जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४
स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक
THIMI TIMES WEEKLY



वर्ष १८ | अङ्क ०१ | ने.सं. ११४४ | साउन ०२ गते बुधबार, २०८१ | 17 July 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## नयाँ सरकारमा राजनीतिक स्थायित्वको लागि संविधान संशोधन कठीन




काठमाडौँ । नेपालको राजनीतिमा जे पनि हुन सक्छ । पार्टीहरुका बीच सत्ताका लागि हुने गरेको यस प्रकारको खेलले आम सर्वसाधारणहरु भने आजित भइसकेको छ । हालै देशमा भईरहेको प्राकृतिक प्रकोप बाढी पहिरो, डुवान तथा पहिरोका कारण सर्वसाधारणहरुको विचल्लीको अवस्था छ । तर राजनीतिक दलहरुको दृष्टि भने सत्तारोहण र सत्ताबाट च्यूत गर्ने खेलमा नै मग्न हुने गरेको छ । एकातर्फ संसदमा अहिले कसैको एकल बहुमत कायम रहेको अवस्था छैन । त्यस कारण पनि राजनीतिक दलहरुको लागि दुई वा सो भन्दा बढी दलको गठवन्धनबाट मात्र सरकार बनाउन सक्ने अवस्था छ । यसरी देशको मूलधार मानिएको पहिलो, दोस्रो र तेस्रो दलहरु मिलिजुली सरकारको नेतृत्व गर्ने भद्र सहमती भएकै कारण पहिलो कार्यकाल संसदमा रहेको तेस्रो ठूलो दल नेकपा माओवादीका अध्यक्ष प्रचण्ड प्रधानमन्त्री बन्यो ।

नेकपा माओवादीले पहिले एमाले त्यसपछि नेपाली कांग्रेस र पुन: नेकपा एमालेको समर्थनमा चौथो पटकसम्म संसदमा विश्वासको मत लिदै प्रधानमन्त्री बनेका उनलाई पछिल्लो पटक संसदमा पहिलो र दोस्रो स्थानमा रहेको नेपाली कांग्रेस र नेकपा एमालेले बिश्वासको मत दिएनन् र संसदमा दोस्रो ठूलो दलको रुपमा रहेको नेकपा एमालेका अध्यक्ष केपी शर्मा ओली चौथो पटक प्रधानमन्त्री बन्न सफल भएका छन् ।

यसरी संसदको यस पाँच वर्षे कार्यकालमा अन्तिम पटक

बाँकी पेज ७ मा

## संयुक्त राष्ट्रसंघमा आदिवासी आयोगका अध्यक्ष थापाको सम्बोधन

काठमाडौं । आदिवासी जनजाति आयोगका अध्यक्ष राम बहादुर थापा मगरले नेपालको शासन प्रणाली उदार रहे पनि राज्य संयन्त्रमा आदिवासी जनजातिको प्रतिनिधित्व अपेक्षित हुन नसकेको बताएको छ । जेनेभामा जारी रहेको आदिवासी अधिकार सम्बन्धी संयुक्त राष्ट्रसंघीय विज्ञ समूहको १७ औं सभामा नेपालको तर्फबाट सम्बोधन गर्दै थापाले सो धारणा राखेको हो ।

उनले आदिवासी जनजातिका लागि विशेष, स्वायत्त र संरक्षित क्षेत्रका लागि सर्वोच्च अदालतले कानुन बनाउन निर्देशात्मक आदेश दिए पनि कार्यन्वयन हुन नसकेको बताए । यसैकारण राज्य संयन्त्रमा आदिवासी जनजातिको प्रतिनिधित्वमा उल्लेखनीय प्रगति हुन नसकेको उनको भनाइ थियो ।

नेपालमा समावेशी नीतिहरू प्रभावकारी हुन नसकेको बताउँदै, आदिवासी जनजातिको स्वायत्त क्षेत्रको अधिकार सुनिश्चित गर्न, उनीहरूको अधिकारको ज्ञानमा वृद्धि गर्न संयुक्त राष्ट्रसंघबाट सहयोगको अपेक्षा राखेका छन् ।

अध्यक्ष थापाले संयुक्त राष्ट्र संघका विभिन्नसंयन्त्रहरूमा आदिवासी जनजातिहरूको सहभागिता सुनिश्चित गर्ने उपायहरू खोज्न पर्ने सुझाव पनि दिएको छ ।

उनले संयुक्त राष्ट्रसंघीय विज्ञ संयन्त्रले अन्तर-क्षेत्रीय आदिवासी जनजाति आयोगका प्रतिनिधिहरूको ककस गठन गर्ने सम्भावनाको अध्ययन गर्न सकिने र यसबाट संयुक्त राष्ट्र र यसको प्रणालीमा आदिवासीहरुको सहभागिता सुनिश्चित गर्न सकिने बताए ।

बाँकी पेज ७ मा

## बाढी, पहिरो लगायतका विपद्मा परी हालसम्म ११३ जनाको मृत्यु

काठमाडौं । गत जेठ २८ गतेदेखि देशका विभिन्न स्थानमा अविरल वर्षाको कारण आएको बाढी, पहिरो लगायतका विपद्मा परी सोमबारसम्म १ सय १३ जनाको मृत्यु भएको छ ।

बाढी, पहिरो लगायतका विपद्मा परी काठमाडौं उपत्यकामा २ जना, कोशी प्रदेशमा २० जना, मधेश प्रदेशमा ५ जना, बागमती प्रदेशमा १३ जना, गण्डकी प्रदेशमा ३८ जना, लुम्बिनी प्रदेशमा २३ जना, कर्णाली प्रदेशमा ४ जना र सुदूरपश्चिम प्रदेशमा ८ जना गरी जम्मा १ सय १३ जनाको मृत्यु भएको हो ।

साथै काठमाडौं उपत्यकामा ८ जना, कोशी प्रदेशमा ३१ जना, मधेश प्रदेशमा ९ जना, बागमती प्रदेशमा ७ जना, गण्डकी प्रदेशमा २८ जना, लुम्बिनी प्रदेशमा ९ जना, कर्णाली प्रदेशमा १६ जना र सुदूरपश्चिम प्रदेशमा ११ जना गरी जम्मा १ सय १९ जना घाइते भएका छन् । घाइतेहरूलाई उपचारको लागि स्थानीय अस्पताल लगिएको छ । साथै कोशी प्रदेशमा ४१ जना, गण्डकी प्रदेशमा १२ जना गरी जम्मा ५३ जनाको उद्दार गरिएको छ । बाढी पहिरोमा परी कोशी प्रदेशमा २ जना, मधेश प्रदेशमा १ जना, बागमती प्रदेशमा २ जना र गण्डकी प्रदेशमा १ जना र सुदूरपश्चिम प्रदेशमा १ जना गरी ७ जना वेपत्ता भएका छन् ।

वेपत्ताको खोजी कार्य जारी छ ।

बाढीको कारण जम्मा १ सय

बाँकी पेज ७ मा

## नेमकिपाका सांसद मन्त्री बन्न नसक्दा भक्तपुर पछि परेको–बस्नेत




भक्तपुर । पूर्व मन्त्री एवं नेकपा एमालेका पोलिटब्युरो सदस्य महेश बस्नेतले भक्तपुर-२ का प्रतिनिधि सभा सदस्य दुर्लभ थापालाई मन्त्री बनाउन वा नबनाउन आफूहरुको कुनै हात नहुने बताएका छन् । भक्तपुर-२ मा सांसद थापासंग चुनावी पराजय भोगेका पूर्व सांसद बस्नेतले यो विषय नेपाली कांग्रेसको पार्टीगत निजी विषय भएको बताएका हुन् ।

सूर्य विनायकमा नेपाल प्रेस सोसाइटीले आयोजना गरेको साक्षात्कार कार्यक्रममा नेमकिपाका सांसद मन्त्री बन्न नसक्दा भक्तपुर पछि परेको उनले सुनाए । साक्षात्कार कार्यक्रममा नेता बस्नेतले आफू उद्योग मन्त्री भएपछि मात्र भक्तपुर सिंहदरवारसंग जोडिएको जिकिर गरे । नेमकिपा र नेपाली कांग्रेसले आलोपालो जित्दै गर्दा भक्तपुर हरेक क्षेत्रमा पछाडी परेको तथ्यांक प्रस्तुत गर्दै नेता बस्नेतले आफू र आफ्नो पार्टीले आधुनिक भक्तपुरको नेतृत्व गरेको

बाँकी पेज ७ मा

## युएनड्रीप कार्यन्वयनमा अदालतको भूमिका सकारात्मक

काठमाडौं । आदिवासी जनजातिको आत्मनिर्णयको अधिकार, भूमि, भूभाग र भूक्षेत्र भित्रका स्रोतमा अग्राधिकारको व्यवस्था सहित आएको आदिवासी जनजातिको अधिकार सम्बन्धी संयुक्त राष्ट्रसंघीय घोषणापत्र (युएनड्रीप) को कार्यन्वयनमा अदालतहरुको भूमिका सकारात्मक देखिएको छ ।

संयुक्त राष्ट्रसंघको मूख्यालय जेनेभामा जारी रहेको मानव अधिकार काउन्सीलको आदिवासी अधिकार सम्बन्धी विज्ञ संयन्त्रको १७ औं सभामा प्रस्तुत भएको अध्ययन प्रतिबेदनमा सो अवस्था दर्शाइएको छ ।

प्रतिबेदन अनुसार इक्वेडर, केन्या र वोलिभियाले संविधानमा नै युएनड्रीपलाई स्वीकार गरेको छ भने अन्य केही देशमा घोषणापत्रको मूल्य र मान्यता अनुसार घरेलु कानूनहरु बनाएका छन् । तर प्राय: सबै देशका सर्वोच्च अदालतहरुले युएनड्रीप अनुकुल नीति, कानून र नियमहरु बनाउन आदेश दिएका छन् । यो अवस्थाको विश्लेषण गर्दै प्रतिबेदनमा आदिवासीको अधिकार सम्बन्धी संयुक्त राष्ट्रसंघीय घोषणापत्र (युएनड्रीप) कार्यन्वयनमा अदालतहरुको भूमिका महत्वपूण रहने जनाइएको छ ।

सो घोषणापत्र सन २००७ मा संयुक्त राष्ट्रसंघको महासभाले पारित गरेको थियो । घोषणापत्र माथिको मतदानमा अष्ट्रेलिया, क्यानडा, न्युजल्याण्ड र संयुक्त राज्य अमेरिकाले विपक्षमा मतदान गरेको थियो भने मतदानमा अजरबैजान, बंगलादेश, भूटान, बुरुण्डी, कोलम्बीया, जर्जिया, केन्या, नाइजेरिया, रसी महासंघ,, समोया र युक्रेनसमेत ३४ मुलुक अनुपस्थित रहेको थियो । तर नेपाल लगायत १४३ देशले घोषणापत्रको पक्षमा मतदान गरेपछि सो घोषणापत्र पारित

बाँकी पेज ७ मा

## प्रतिष्ठानको सिफारिसमा ‘हुम्लो’ आदिवासी जनजाति सूचिकृत

कुमार यात्रु तामाङ

नेपाल सरकारले ‘हुम्लो’ आदिवासीलाई सूचिकृत गरेको छ । २०८१ असार २७ गते बसेको मन्त्रिपरिषदको बैठकले आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानको सिफारिसमा हुम्लो जातिलाई आदिवासी जनजातिमा सूचिकृत गरेको सरकारका प्रवक्ता तथा सञ्चार तथा सूचना प्रविधि मन्त्री रेखा शर्माले जानकारी दिनु भयो ।

हिमाली जिल्ला हुम्लालाई मूल थातथलो बनाउँदै आएका ‘हुम्लो’आदिवासीहरु सूचिकरणको अभावमा राज्यले प्रदान गर्दै आएको निजामति लगायतको आरक्षण सेवाबाट बन्चित भएका थिए ।

आदिवासी सूचिकरणका लागि प्रतिष्ठानले मानवशास्त्री डा. मुक्तसिंह लामाको संयोजकत्वमा विज्ञ कार्यदल गठन गरी अध्ययन गराएको थियो । कार्यदलले केही समय अगाडि प्रतिष्ठानमा आफनो प्रतिबेदन बुझाए अनुसार सरकारलाई सूचिकरणका लागि सिफारिस गरिएको प्रतिष्ठानका सदस्य-सचिव कमल राजबंशीले बताउनु भयो ।

‘आर्थिक बर्ष २०७९/८० कै कार्यक्रम अनुसार कार्यदल गठन गरिएको थियो, कार्यदलको प्रतिबेदनलाई सञ्चालक परिषदले सरकारमा सूचिकृत भएको हो ।’ राजबंशीले भन्नु भयो -‘नेपाल सरकारको निर्णय राजपत्रमा प्रकासित भए पछि आदिवासी जनजातिको मान्यता प्राप्त गर्छन् ।’

प्रतिष्ठानका सदस्य-सचिव राजबंशीका अनुसार कार्यदलमा मानवशास्त्री लामा सहित समाजशास्त्री डा. विष्णु सिन्जाली, भाषाविद डा. तारामणी राईसम्मिलित तीन सदस्यीय कार्यदल बनेको थियो ।

यस अघि पनि सरकारले राना थारुलाई फरक आदिवासी जनजातिमा सूचिकृत गरेको थियो । तर सो सूचिकृत प्रक्रिया परिषदबाट निर्णय नभएको हुँदा विवाास्पद हुँदै आएको छ ।

हुम्लाका पूर्व साँसद

बाँकी पेज ६ मा

## ओलीलाई दुई तिहाइको संयोग

काठमाडौं । अघिल्लो पटक वामपन्थी घटककै दुई तिहाईको सरकार टिकाउन नसकेका प्रधानमन्त्री केपी शर्मा ओलीलाई यसपटक पनि संयोगले नेपाली कांग्रेसको समर्थनबाट दुई तिहाई कै समर्थन मिलेको छ । २०७४ को निर्वाचनमा नेकपा माओवादीसँग पार्टी एकीकरण गर्ने गरी मिलेर चुनाव लडेको एमालेले दुई तिहाई नजिक मत पाएको थियो । पछि पार्टी एकीकरण गरी नेकपा बनाइयो र नेकपा नेतृत्वको सरकारमा ओली दुई तिहाइको प्रधानमन्त्री बनेका थिए । तर, त्यो दुई तिहाई सुखद रहेन ।

### दुई दुई पटक संसद विघटन

भयो । नेकपाबाट माओवादी फुटेर बाहिरियो । अन्त्यमा पार्टी फुटाएर माधव नेपाल समूह पनि एमालेबाट बाहिरियो । त्यो अवस्था गुजारेका ओली पुन: नेपाली कांग्रेसको समर्थनमा प्रधानमन्त्री नियुक्त भएका उनले २२ सदस्यीय मन्त्रिपरिषद पनि बनाएका छन् ।

ओलीको पक्षमा १८४ मत देखिएको छ । यो प्रधानमन्त्रीलाई कुनै पनि निर्णय गर्न बाधा नपुग्ने मत हो । तर, उनी प्रधानमन्त्री बन्दा दोहरिएको दुई तिहाइको संयोगलाई धेरैले शंका मानेका छन् । ओलीले पहिले जस्तै दुई तिहाइको दुरुपयोग गर्ने हुन की भन्ने आशंका बढाएको छ । त्यो बेला पार्टी एकीकरणको प्रक्रियामा रहेको एमाले र माओवादी केन्द्रको सुविधाजनक बहुमत आएको थियो । पछि उपेन्द्र यादव लगायतका दल मिल्दा दुई तिहाई पुगेको थियो ।

दुई अध्यक्ष रहेको नेकपाबाट ओली र अर्का अध्यक्ष पुष्पकमल दाहाल प्रचण्डबीच आधा आधा समय मिलेर प्रधानमन्त्री बन्ने सहमति भएको थियो । तर, समय बित्दै जाँदा ओलीले प्रचण्डलाई प्रधानमन्त्री नदिने अवस्था सिर्जना भयो । यहीबाट दुई तिहाई लिएर सरकारको नेतृत्व गरिरहेका ओलीको दैनिकी ओरालोतिर लाग्यो । पार्टीमा आएको विवाद उनले साम्य बनाउन सकेनन् । उल्टै दम्भ देखाए । प्रचण्ड-माधव नेपाल समूहको बहुमत

बाँकी पेज २ मा

## आयोगको...

केन्द्रीय समितिको बैठकबाट ओलीलाई अध्यक्षबाट हटाइएको घोषणा गरियो । ओलीलाई हटाउने गरी भएको निर्णयमा ३१५ जना केन्द्रीय सदस्य सहभागी रहेको बताइएको थियो । यो रापमा ओलीले २०७७ पुस ५ मा पहिलोपटक संसद विघटन गर्ने निर्णय लिए । त्यतिबेला चुनाव कि संसद पुन:स्थापना भन्ने अनिर्णीत अवस्थामा रहेको कांग्रेस अहिले ओलीको साथमा छ। त्यो बेला ओलीको कदम अदालतले अवैधानिक ठान्यो । सरकारबाट सहयात्रीहरू बाहिरिए । तर, ओलीको कदम सुधारिएन । पार्टीको विवाद उग्र बनेका बेला सोही वर्ष २०७७ जेठ ७ को मध्यराती ओलीले दोस्रोपटक संसद विघटन गरेपछि त्यस विरुद्धको कानूनी र राजनीतिक लडाइबाट उनी बाहिरिनुपर्यो ।

अघिल्लो समयमा दुईपटक संसद विघटन गरेका प्रधानमन्त्री ओली अहिले पनि राजनीतिक, कानूनी र नैतिक रुपमा त्यो ठीक थियो भनिरहेका छन् । त्यसबाट राजनीतिक, संवैधानिक र नैतिक दबाब खेपिरहेका प्रधानमन्त्री ओलीले संसद् विघटनको औचित्य पुष्टि गर्न सकेका छैनन् । पहिलोपटक संसद् विघटन गर्दा ओलीसँग झन्डै दुई तिहाई सांसद थिए, तर दोस्रो संसद विघटनसम्म पुग्दा ओलीसँग ९३ सांसद मात्र रहे ।

ओलीले पहिलो पटक २०७७ पुस ५ गते प्रतिनिधि सभा विघटन गर्दै वैशाखमा निर्वाचन गर्ने घोषणा गरेका थिए तर सर्वोच्च अदालतले फागुन ११ गते सरकारको सो निर्णय उल्टाइदिएको थियो । तत्कालीन राष्ट्रपति विद्यादेवी भण्डारीले पनि संविधानको धारा ७६ को उपधारा (५) मा धेरै खेल्न खोजेकी थिइन् । दोस्रो पटक संसद विघटनपछि माओवादी बाहिरियो र एमाले फुट्यो अनि ओलीको अध्याय पनि सिद्धिएको थियो ।

अहिले प्रतिनिधि सभामा ८८ सीट रहेको नेपाली कांग्रेस र ७८ सीट रहेको एमाले मिलेर सरकार बनेको हो । यसमा अशोक राई नेतृत्वको जसपा, उन्मुक्ति पार्टी र लोसपा सरकारमै सहभागी भएका छन् । संसदीय अंक गणितमा जुटेको अहिलेको संख्या अघिल्लो कार्यकालमा एमाले र माओवादी गठबन्धन भन्दा बढी शक्तिशाली हुने देखिएको छ । संविधान संशोधनका लागि प्रतिनिधि सभामा सांसदको एक सय ८४ संख्या आवश्यक पर्दछ । राष्ट्रिय सभामा भने दुई तिहाइका लागि नेकपा एकीकृत समाजवादी मिल्नुपर्छ नत्र माओवादी फुटाउन सक्नुपर्छ ।

अहिले पनि ओलीले संसद विघटन गरी मध्यावधि घोषणा गर्न सक्ने आशंका सबै दलमा छ। मुलत: संविधान संशोधन यसको उद्देश्य भनिएको छ । संविधान संशोधन गर्न माओवादी सहमत छैन । राजनीतिक स्थायित्वका लागि संविधानमा आवश्यक संशोधन गर्ने र तदनुरूपका कानुन समेत निर्माण गर्ने गरी केपी शर्मा ओलीको नेतृत्वमा सरकार बनेको हो । सहमति अनुसार ओली दुई वर्ष प्रधानमन्त्री, शेरबहादुर देउवा बाँकी अवधि चुनावसम्म प्रधानमन्त्री बन्ने भन्नेछ ।

संविधान संशोधन गर्दा समानुपातिक प्रतिनिधित्वका आधारमा चुनिएर आउने सांसदलाई राष्ट्रिय सभा लैजाने, उपराष्ट्रपतिलाई सभाको अध्यक्ष बनाउने, प्रतिनिधि सभा र राष्ट्रिय सभा दुवैको सिट संख्याबारे पुनर्विचार गर्ने, पालिकाको संख्या ७५३ बाट घटाएर वडाको संख्या बढाउने भनिएको छ । तर, सहमति सार्वजनिक भएको छैन । प्रदेश सभामा समानुपातिक तर्फको प्रावधान हटाएर प्रत्यक्ष निर्वाचित मात्रै राख्ने सहमति भएको चर्चा छ । ओलीले गर्नुपर्ने कार्यभार खासमा यिनै हुन् ।

संविधान संशोधन गर्न सक्ने मत सुरुमै उनलाई मिलेको छ । अझ यही सरकारलाई राष्ट्रिय सहमतिको सरकार बनाउने पनि भनिएको छ । पहिलेको अनुभव र भोगाइले ओली यो पटक संसद विघटनसम्म जान नसक्ने कांग्रेसको बुझाइ छ । ओलीको विगतलाई हेर्ने हो भने यसै हो भनेर भर गरिहाल्ने अवस्था पनि छैन । कांग्रेससँग भएको सहमति अनुसार सत्ता छोड्न ओली तयार होलान् नहोलान् भन्ने शंका पनि उत्तिकै छ । भोलिका दिनमा उनको व्यवहार कस्तो देखिन्छ त्यसले पनि यो दुई तिहाइको संयोगले सुधार गर्छ कि बिगार भन्ने देखाउनेछ ।

# बालबालिका बेचबिखनको आरोप लागेका महतो फरार



विकास श्रष्ठ

काठमाडौं । नव जनसेवा नेपाल सुरक्षित गर्भपतन सेवा भन्दै रामसुन्दर महतोले बालबालिका बेचबिखन गर्ने गरेको पाइएको छ । बालबालिका बेचबिखनमा संलग्न रहेका महतो समाचार प्रकाशित भएपछि आफ्ना कर्तुहरू लुकाउन विभिन्न शक्ति केन्द्र धाउदै हारगुहार मागि रहेका छन् । बालबालिका बेचबिखन गर्ने महतोलाइ नेपाल प्रहरीले पनि व्यापक खोजी कार्य जारी राखेको महानगरीय प्रहरी वृत्त कालिमाटीले जनाएको छ ।

यो आम नागरिकको चासोको विषय बनेको छ । यस्तै चासो युक्त अपराध पूर्ण कार्य नेपालकै संघीय राजधानी काठमाडौंमै दिनदहाडै हुनुले बालबालिका असुरक्षित रहेको एक जना अभिभावकले बताएका छन् । काठमाडौंमै दिनदहाडै बालबालिका बेचबिखन गर्नुले प्रहरी प्रशासनमाथि पनि प्रश्न खडा भएको छ ।

सञ्चार माध्यममा केही दिनदेखि लगातार समाचार प्रकाशित भएपनि प्रहरीले चासो नदेखाउदा अभियुक्त महतो अहिलेसम्म पनि पक्राउ पर्न सकेका छैनन् । अहिलेसम्म महतोलाइ प्रहरीले पक्राउ नगर्नुले आशंका समेत उब्जाएको छ । यस्ता घटनाको प्रहरीले छिटो न्यूनिकरण गर्नुपर्नेमा अहिलेसम्म अभियुक्तै फरार रहनुले प्रहरीकै मिलेमतोमा महतो फरार भएका त होइनन् भन्ने प्रश्न उब्जाएको छ ।

समाचार प्रकाशित भएको यतिका दिनसम्म पनि आरोपित प्रहरीको अनुसन्धानमा नआउनुले शंका उत्पन गरेको छ । यस्तो गम्भीर कुरामा समाचार प्रकाशित भएपनि प्रहरीले चासो नदेखाउनुले के प्रशासनको यस्तै ढिला सुस्तिले सर्वसाधारणले के न्याय पाएका होलान त भन्ने प्रश्न उठ्नु स्वभाविक जस्तै भएको छ ।

काठमाडौं जिल्लाकै मुटु मानिने कलंकी चोकमै "नव जन सेवा सुरक्षित गर्भपतन सेवा"को नाममा बालबालिकाको बेचबिखन गर्दै आएका महतोले गरीब किशोरीहरुलाई आर्थिक प्रलोभन दिंदै उनीहरुबाट जन्मिएका शिशुहरुलाई बिक्री गर्दै राज्यलाईनै चुनौती दिएका छन् ।

महतोले असाध्यै आर्थिक कमजोरी भएका किशोरी तथा महिलाबाट जन्मिएका बालबालिका बेचबिखन गरी भक्तपुरको सानो ठिमीमा भव्य आलिशान महल बनाएको स्रोतले जनाएको छ । गरीब किशोरीहरुबाट जन्मिएका बच्चाहरूलाई बेचबिखन गर्दै महतोले मदिरा र युवतीहरूसँग झुम्ने गरेको समेत गर्ने गरेको खुलासा भएको छ ।

बालबालिका बेच्ने धन्दागरी रहेका मानव तस्करको नामले कलंकी चोकमा चिनिने रामसुन्दर महत्तोले गरेका काला कर्तुत बारे विभिन्न मिडियामा समाचार प्रकाशित भएपछि उनका सपरिवार "नव जन सेवा सुरक्षित गर्भपतन सेवा" नामक बालबालिका बेचबिखन गर्ने कारखाना बन्द गरी हाल फरार छन् ।

अझ उदेक लाग्ने कुरा के छ भने महतोका श्रीमती स्वास्थ सेवामा कार्यरत नर्स हुन भने रामसुन्दर आफु डाक्टर भएको बताउदै आएका छन् । त्यस्तै काठमाडौंको एक नाम चलेको हस्पिटलमा काम गर्दै आएकी उनी पैसा कमाउने महतोको अखडामा पुगेको बुझिन्छ । अविवाहित उनी महतोको मायाजालका साथ झुट्टा आश्वासनमा फसी केही वर्ष अगाडि मात्र विवाह बन्धनमा बाँधिएको महतोकी श्रीमतीले बताएकी छिन् ।

हाल फरार रहेका रामसुन्दर दम्पतीले उनीहरुका विषयमा विभिन्न सञ्चार माध्यमा समाचार प्रकाशित भएपछि समाचार प्रकाशित गर्ने मिडियालाई फोन गर्दै आफू तराई रहेको बताउँदै आएपनि महतो काठमाडौं उपत्यकाको कुनै ठाउँमा लुकेर बसेको बुझिएको छ ।

यतिमात्र नभई महतोले आफ्नो सम्बन्ध तराई मुलका केही नेताहरुसँग घनिष्ट रहेको भन्दै समाचार प्रकाशित गर्ने पत्रकारलाई ठाँउको ठाउँ ठिकपार्ने सम्मको धम्की दिन भ्याएका छन् । महतोले गरेका यस्ता जघन्य अपराध जस्ता कार्यको नेपाल प्रहरीले सुक्ष्म अनुसन्धान गरीरहेको बताईन्छ । शक्ति र सत्ताको आडमा गैरकानुनी एवम् मानव बेचबिखन गर्नेलाई कडा कार्वाही हुने नेपाल प्रहरीका प्रबक्ता डिआईजी दानबहादुर कार्कीको भनाई छ ।

यस्तै विभिन्न समाचार माध्यममा समाचार प्रकाशित भएपछि नेपाल प्रहरीको केन्द्रीय अनुसन्धान व्युरो सिआईबीले समेत महतोको विषयमा चासो राखेको बुझिएको छ ।

# गाजा सहरमा इजरायलको विनाश लीला, ७१ जनाको मृत्यु

एजेन्सी । इजरायलले दक्षिणी गाजा पट्टीमा भएको ठूलो आक्रमणमा हमासका एक संदिग्ध सैन्य कमाण्डरलाई निशाना बनाएको जनाएको छ। स्थानीय स्वास्थ्य अधिकारीहरुका अनुसार यस हमलामा कम्तीमा ७१ जनाको मृत्यु भएको जनाएको छ । मृतकमा मोहम्मद दीफ पनि परेका थिए वा थिएनन् भन्ने तत्काल थाहा हुन सकेको छैन । यद्यपि, इजरायली अधिकारीहरूले दाबी गरे कि उनी र हमासका सेकेन्ड इन कमान्ड, राफा सलामा हमलाको निशाना थिए । तर हमासले यो दाबीलाई अस्वीकार गरेको छ । मोहम्मद दीफ अक्टोबर ७ को आक्रमणको मुख्य साजिशकर्ता भएको मानिन्छ ।

दक्षिणी इजरायलमा भएको यो हमलामा करिब १२०० मानिस मारिए पछि इजरायल-हमासबीच युद्ध सुरु भयो । डेफ धेरै वर्षदेखि इजरायलको मोस्ट वान्टेड सूचीको शीर्षमा रहेको र विगतमा धेरै इजरायली हमलाहरूबाट भागेको विश्वास गरिन्छ । उनको सम्भावित हत्याले युद्धविराम वार्तालाई असर पुग्ने र नौ महिनाको अभियानमा इजरायली विजयको रूपमा हेरिनेछ । इजरायललाई जवाफ दिँदै हमासले एक विज्ञप्ति प्रकाशित गर्दै भन्यो, 'यी झूटा दाबीहरूले इजरायलको भयानक नरसंहारको खेल लुकाउन काम मात्र गर्छ ।'

गाजाको स्वास्थ्य मन्त्रालयले आक्रमणमा कम्तीमा २८९ जना घाइते भएको र धेरै घाइते र मृतकहरूलाई नजिकैको नासेर अस्पतालमा लगिएको बताएको छ । अस्पतालमा, एसोसिएटेड प्रेस पत्रकारहरूले ४० भन्दा बढी शवहरू गणना गरेको र प्रत्यक्षदर्शीहरूले आक्रमणको वर्णन गरे । इजरायली सेनाले 'अतिरिक्त आतंकवादीहरू नागरिकहरू बीच लुकेका थिए' र आक्रमण भएको ठाउँलाई रूख र धेरै भवनहरूले घेरिएको क्षेत्रको रूपमा वर्णन गरेको दाबी गरेको छ ।

आक्रमण पछिको फुटेजमा जलेको पाल, जलेको कार र घरायसी सामानहरू जमिनमा छरिएको देखाइएको थियो जब आपतकालीन कामदारहरू र प्यालेस्टिनीहरूले नौ महिनाको युद्धबाट विस्थापित भएकाहरूलाई खोजिरहेका थिए । पीडितहरूलाई कार, गधा गाडा र गलैंचामा लगिएको थियो । उत्तरी रफाहदेखि खान युनिससम्म फैलिएको इजरायलले तोकेको सुरक्षित क्षेत्र मुवासी भित्र आक्रमण भएको प्रत्यक्षदर्शीहरूले बताएका छन् । तटीय पट्टी हो जहाँ सयौं हजारौं विस्थापित प्यालेस्टिनीहरूले सुरक्षा खोजेका छन् र तिनीहरूमध्ये धेरैले अस्थायी पालमा शरण लिएका छन् ।

"उत्तरबाट आउने मानिसहरूका लागि यो सुरक्षित क्षेत्रको रूपमा तोकिएको थियो," एक विस्थापित प्यालेस्टिनीले भने, जसले नाम खुलाउन अस्वीकार गरे । यहाँ बालबालिकाको मृत्यु भयो । हामीले आफ्नै हातले उनीहरुको अंग संकलन गर्‍यौं ।' उनले सात वा आठ मिसाइलले आक्रमण गरेको र उद्धारकर्मीलाई पनि निशाना बनाएको बताए । इजरायली अधिकारीका अनुसार हमासद्वारा सञ्चालित खान युनिसको घेरा लगाएको क्षेत्रमा हमला भएको हो, तर सही स्थानबारे भने खुलाएको छैन ।

अमेरिका, इजिप्ट र कतारका मध्यस्थकर्ताहरूले गाजामा तीन चरणको युद्धविरामको प्रस्तावित सम्झौता र बन्धकहरूको रिहाइको योजनालाई लिएर इजरायल र हमासबीचको मतभेदलाई कम गर्ने प्रयास गरिरहँदा यो पछिल्लो आक्रमण भएको हो । मोहम्मद देइफ दुई दशकभन्दा बढी समयदेखि लुकेर बसेका थिए र उनलाई मार्ने धेरै प्रयासमा बाँचेपछि पक्षघात भएको मानिन्छ । उनको एक मात्र चिनिने तस्बिर इजरायलले जारी गरेको ३० वर्ष पुरानो परिचय पत्र हो, र गाजामा पनि, थोरै मानिसहरूले मात्र उनलाई चिन्थे ।

इजरायलले हमासको अक्टोबर ७ मा आक्रमण गरेपछि गाजामा आफ्नो कारबाही सुरु गर्‍यो जसमा आक्रमणकारीहरूले दक्षिणी इजरायलमा प्रवेश गरे र लगभग १,२०० मानिसहरू मारिए - जसमध्ये धेरैजसो सर्वसाधारण नागरिक थिए र लगभग २५० अन्यलाई अपहरण गरे । तब देखि, इजरायली भूमि आक्रमण र बम विष्फोटले गाजामा ३८३०० भन्दा बढी फिलिष्टिनी व्यक्तिको मृत्यु भएको छ र ८८,००० भन्दा बढी घाइते भएका स्वास्थ्य मन्त्रालय जारी गरेको रिपोर्टमा जनाएको छ ।

मन्त्रालयले आफ्नो गणनामा लडाकु र नागरिकबीच विना भेदभाव गाजाका २.३ मिलियन मानिसहरूमध्ये ८० प्रतिशत भन्दा बढी आफ्नो घरबाट विस्थापित भएका छन् र धेरैजसो अहिले पनि फोहोर पाल रहेको शिविरहरूमा शरण लिएर बस्छन्, जहाँ उनीहरूले भोकमरीको सामना गरिरहेका छन् ।

# ट्रम्पलाई गोली हानिएको एआर-१५ बन्दुक अमेरिकामा कति लोकप्रिय छ !

एजेन्सी। एआर-१५ राइफल अमेरिकामा सबैभन्दा लोकप्रिय बन्दुकहरू मध्ये एक हो। यसलाई त्यहाँ निकै घातक हतियार मानिन्छ । यो देशको सबैभन्दा खराब सामूहिक गोलीबारीमा प्रयोग भएको छ। जसका कारण २० वर्षीय युवकले डोनाल्ड ट्रम्पलाई गोली हानेका थिए, उनी भाग्यमानी थिए कि गोली उनको कानमा लाग्यो र उनी जोगिए ।

किन एआर-१५ यति घातक छ ?

- एआर-१५ एक अर्ध-स्वचालित हतियार हो, जसको मतलब यसको प्रयोगकर्ताले द्रुत रुपमा धेरै शटहरू फायर गर्न सक्छ । यसलाई टाढाबाट चलाउन सकिन्छ र यसको लक्ष्य सामान्यतया सही हुन्छ । यही कारणले गोली ट्रम्पको कान छोएर निस्क्यो, धन्यबाद उनी जोगिए तर त्यसमा एक जनाको मृत्यु भयो ।

एआर-१५ बन्दुकले उच्च गतिमा फायर गर्छ, ह्यान्डगनको गोली भन्दा तीन गुणा गतिमा यात्रा गर्दै, लामो दूरीको सटीकता प्रदान गर्दछ र शरीरका भागहरूमा लागेमा ठूलै चोट पुऱ्याउछ । टाउको वा छातीमा लागेमा तुरुन्तै मृत्यु हुन सक्छ ।

यो बन्दुक अमेरिकामा किन लोकप्रिय छ ?

- सामान्य जनताले यसलाई सजिलै किन्न सक्छन् र यो सस्तो पनि छ । यो एक आक्रमण बन्दूक हो जुन जनताको लागि प्रतिबन्धित गरिएको छैन । यस कारणले गर्दा, अमेरिकामा अधिकांश घटनाहरूमा यसको प्रयोगको धेरै रिपोर्टहरू छन् । अमेरिकामा बन्दुकका कारण हुने अधिकांश मृत्यु यही बन्दुककै कारण हुने गरेको छ । तिनीहरू फायरिङमा व्यापक रूपमा प्रयोग गरिन्छ ।

मे २०२२ मा, एक पूर्व विद्यार्थीले टेक्सासको उभाल्डेमा रहेको रोब इलिमेन्टरी स्कूलका १९ बालबालिका र दुई शिक्षकको हत्या गर्न यही एआर-१५ प्रयोग गरेका थिए ।

यो अक्टोबर २०१७ मा लस भेगासमा पनि प्रयोग भएको थियो । जहाँ एक संगीत समारोहमा बन्दुकधारीले ६० जनाको हत्या गरेका थिए । २०२३ सम्मको वाशिंगटन पोस्ट सर्वेक्षणले अनुमान गरेको छ कि



२० मध्ये एक अमेरिकी वयस्कले कम्तिमा एउटा एआर-१५ हतियारको स्वामित्व पाउनेछ ।

के एआर-१५ बन्दुक अमेरिकामा किन्न सजिलो छ ?

- यो बन्दुक किन्न धेरै सजिलो छ । अमेरिकामा बन्दुक पसलहरू धेरै छन् । घर नजिकै बन्दुक पसल हुन्छ । कुनै पनि व्यक्तिले त्यस्तो पसलमा गएर आफ्नो वैध परिचयपत्र देखाएर राइफल वा बन्दुक किन्न सक्छ । तर तिनीहरूले संघीय पृष्ठभूमि जाँच पास गर्न सक्छन् ।

यस प्रक्रियामा हामी खरिदकर्ताको आपराधिक इतिहास हेर्छौं र उनी कहिल्यै मानसिक संस्थामा भर्ना भए वा भएनन् भनेर पनि हेर्छौं तर बन्दुक बिक्री पसलहरूले पनि यस विषयमा ढिलाइ देखाउँछन् ।

के यो बन्दुकलाई सामान थपेर थप घातक बनाउन सकिन्छ ?

- हो, अमेरिकामा एआर-१५ को लोकप्रियताको एउटा कारण यो हो कि तिनीहरू व्यापक रूपमा अपग्रेड गर्न सकिन्छ र तिनीहरूको क्षमता केही सहायक उपकरणहरूको साथ बढाउन सकिन्छ । टेलिस्कोप, ठूलो क्षमताको म्यागाजिन र अन्य धेरै सामानहरू यसमा थप्न सकिन्छ।

के यो राइफल कहिल्यै प्रतिबन्धित थियो, त्यसपछि कसरी हटाइयो ?

सन् १९९४ मा राष्ट्रपति बिल क्लिन्टनको कार्यकालमा आक्रमण हतियारमाथि प्रतिबन्ध लगाइएको थियो, यो राइफल पनि यसमा समावेश थियो तर अमेरिकामा बन्दुक उत्पादक लबी निकै शक्तिशाली छ । उनको दबाबमा यो प्रतिबन्ध २००४ मा हटाइयो । अमेरिकामा बन्दुक सम्बन्धी नियमनका बारेमा हरेक पटक चर्चा हुन्छ, बन्दुकसम्बन्धी कानुन सुधार गर्ने सबै प्रयासहरू असफल हुने गरेका छन् ।

के अमेरिकी कानूनले बन्दुकको स्वामित्वलाई मौलिक अधिकार मान्छ ?

- हो, यो सत्य हो कि बन्दुक राख्नु अमेरिकी संविधान अन्तर्गत संवैधानिक अधिकार हो । यद्यपि, क्यालिफोर्निया, इलिनोइस, मेरील्याण्ड, न्यू जर्सी र वाशिंगटन डीसी जस्ता धेरै राज्यहरूले आक्रमण हतियारहरूको स्वामित्वमा प्रतिबन्ध लगाएका छन् । क्यालिफोर्नियाले दाबी गरेको छ कि यस प्रकारको कानूनले एक दशकमा २१,००० जीवन बचाउन मद्दत गरेको छ ।

के एआर-१५ राइफल अमेरिकी सेनाले प्रयोग गर्ने घातक एम१६ जस्तै हो ?

- एआर-१५ राइफल अमेरिकी सेनाको एम १६ राइफलको आधारमा बनाइएको हो । जसलाई अमेरिकी सेनाले भियतनाम युद्धदेखि नै प्रयोग गर्दै आएको छ । यो राइफल शिकार वा आत्मरक्षाको लागि सही शटहरू लगाउन सक्षम मानिछ । यसको धेरै मोडेल र डिजाइनले यसलाई थप हिट बनाएको छ । यसको घातकपनाले यसलाई सामूहिक शूटरहरूको लागि रोजाइको हतियार बनाएको छ ।

अमेरिकामा एआर-१५ राइफलको मूल्य कति छ ?

संयुक्त राज्यमा एआर-१५ राइफलहरूको मूल्य तिनीहरूको मोडेलमा निर्भर गर्दछ ।

तल्लो तहको मोडेल वा यो राइफलको आधार मोडेललाई के भनिन्छ । एआर-१५ राइफलको आधारभूत मोडल लगभग ४०० डलरबाट सुरु हुन्छ । माथिका राइफल मोडेलहरू २,००० डलर वा बढीमा बेच्न सक्छन् । धेरै एआर-१५ राइफलहरू ८०० देखि १५०० डलरको मूल्य दायरामा आउँछन् ।

अमेरिकामा यो राइफलको बिक्रीको आंकडा के छ, एक वर्षमा कति बिक्री हुन्छ ?

- संयुक्त राज्यमा प्रत्येक वर्ष कति एआर-१५ राइफलहरू बेचिन्छन् भन्ने सही तथ्याङ्क प्रदान गर्न गाह्रो छ । यो अनुमान गरिएको छ कि देशमा २० मिलियन भन्दा बढी मानिसहरूसँग कानूनी रूपमा एआर-१५ शैलीका राइफलहरू छन् ।

एक स्वचालित बन्दुक के हो?

- स्वचालित बन्दुक भनेको स्वचालित हतियार हो, जसको मतलब यो हो कि यसले प्रत्येक शट पछि म्यानुअल रूपमा पुनः लोड नगरी एक पङ्क्तिमा धेरै शटहरू फायर गर्न सक्छ।

एआर-१५ राइफलमा कतिवटा म्यागजिन राख्न सकिन्छ ?

- धेरै आधुनिक एआर-१५ राइफलहरूमा उच्च क्षमताको म्यागजिनहरू छन् । जसमा ३० वा १०० राउन्ड पनि राख्न सकिन्छ । यसले शूटरलाई पुनः लोड नगरी गोलीहरू फायर गर्न सक्छन् ।

यसको गोलीको साइज कति हुन्छ ?

- एआर-१५ का धेरै भेरियन्ट मोडेलहरू भएकाले, यसका कारट्रिजहरूको दायरा र साइज पनि फरक छन् । यद्यपि एआर-१५ ले .२२३/५.५६ एमएम बुलेट प्रयोग गर्दछ, यसको गति र सानो आकारले पनि यसको घातकतामा योगदान पुऱ्याउँछ, किनकि बुलेटले मानव शरीरमा ठूलो क्षति पुऱ्याउन सक्छ । गोलीको अगाडिको भाग मात्र शरीरमा प्रवेश गर्छ । बाँकी तल्लो भाग बारूदले भरिएको हुन्छ जसको आगो शरीरको लागि घातक हुन्छ ।



# भक्तपुर जिल्ला अदालतमा कुल मुद्दाको ४८.३९ प्रतिशत फछ्र्यौंट

भक्तपुर । भक्तपुर जिल्ला अदालतले गत आर्थिक वर्ष २०८०/०८१ मा कुल मुद्दाको ४८.३९ प्रतिशत मात्र मुद्दा फछ्र्यौंट गरेको छ। अदालतको तथ्यांक अनुसार गत वर्ष अघिल्लो आर्थिक वर्ष २०७९/०८० बाट जिम्मेवारी सरेर आएका २ हजार ५ सय ९४ मुद्दा र आ.व.२०८०/०८१ को वर्ष भरीमा ५ हजार १२ मुद्दा गरी कुल ७ हजार ६ सय ६ मुद्दा थिए । ती मध्ये ३ हजार ६ सय ८१ फर्छ्यौट भएको भक्तपुर जिल्ला अदालतका श्रेष्तेदार ऋतबहादुर पुलामी मगरले जानकारी दिए । जुन कुल मुद्दाको ४८.३९ प्रतिशत मात्र हो ।

तर अदालतको लक्ष्य अनुसार भने ९४.८७ प्रतिशत मुद्दा फछ्यौंट भएको छ। अदालतले गत आर्थिक वर्ष २०८०/०८१ मा ३ हजार ८ सय ८० थान मुद्दा फछ्यौंट गर्ने लक्ष्य लिएकोमा ३ हजार ६ सय ८१ थान मुद्दा फछ्र्यौंट भएको जनाएको हो । भक्तपुर अदालतमा हाल २ वर्ष नाघेका २८५ थान र डीसीएम पूर्वका १३ मुद्दा चालु अवस्थामा रहेको छ। यसैगरी १८ महिना नाघेका मुद्दा संख्या १७४ थान रहेको श्रेष्तेदार पुलामी मगरले जानकारी दिए ।

उनका अनुसार बालबालिका सम्बन्धी मुद्दाको सवालमा भने ४१ वटा लगत रहेकोमा ३३ वटा फर्छ्यौट गरिएको छ भने बाँकी मुद्दा संख्या ८ रहेकोमा एक बालबालिका थुनुवा रहेको छ । यसैगरी अघिल्लो वर्षबाट सरेर आएका र नयाँ मुद्दा अन्तर्गत देवानी मुद्दा ३ हजार ९ सय ७० रहेकोमा २ हजार १ सय ८२ थान मुद्दा फर्छ्यौट भएको छ। व्यक्तिवादी फौजदारी मुद्दा १ हजार ८ सय ३ थान रहेकोमा ७ सय ९९ फर्छ्यौट भएको छ । सरकारवादी फौजदारी मुद्दा संख्या १ हजार ७ सय ३२ रहेकोमा ६ सय ५५ वटा फर्छ्यौट भएका छन । साथै पुनरावेदन भएर आएका ४० मुद्दामा १२, रिट निवेदनतर्फ ६१ मुद्दा रहेकोमा ३३ थान फर्छ्यौट भएको छ ।

निरन्तर सुनुवाइ हुने मुद्दाको लगत ९२ रहेकोमा ५६ फर्छ्यौट गरी सकिएको र बाँकी ३६ रहेको अदालतका सूचना अधिकारी भिमवहादुर पाण्डेले जानकारी दिए । उनले थुनुवा मुद्दा ७२ थान रहेको र थुनुवा संख्या ८५ रहेको बताए । यस्तै विशेष प्रकृतिको निवेदन लगत ६ सय ९९ रहेकोमा ६ सय ९४ वटा फर्छ्यौट भई ५ थान बाँकी रहेको उनले जानकारी दिए ।

# जिपिए ४ सहित उत्तीर्ण भएका विद्यार्थीहरुलाई बधाई तथा अभिनन्दन

भक्तपुर/ नेसनल प्याव्सन भक्तपुरले आफ्ना सदस्य विद्यालयहरुबाट २०८० को एसईई परीक्षामा सम्मिलित भइ जिपिए ४ सहित उत्तीर्ण भएका सबै विद्यार्थीहरुलाई बधाई तथा अभिनन्दन कार्यक्रम सम्पन्न गरेको छ ! राष्ट्रिय परीक्षा बोर्ड (कक्षा) का निर्देशक नन्दलाल पौड्यालको प्रमुख आतिथ्यमा सम्पन्न कार्यक्रममा शतप्रतिशत उत्तीर्ण नतिजा ल्याउने ईमेज स्कुल, यूनिटी स्कुल, सरस्वती शिक्षा सदन स्कुल, ईडेन गार्डेन स्कुल र आरक्षण नेसनल स्कुललाई बधाईका साथ प्रशंसा पत्र प्रदान गरिएको थियो । एसईई २०८० को समग्र औसत नतिजा भन्दा बढी उत्तीर्ण गराउन सफल विद्यालय क्वालिटी स्कुल, साइनिगं स्कुल, डेमोस स्कुल, मदरल्याण्ड स्कुल, ग्लीटर फ्युचर स्कुल, विमल मेमोरियल स्कुल, पारीजात विद्याकुन्ज स्कुल, क्रियटिभ स्कुल, सेन्ट जोन स्कुल, सेकरिट हार्ट स्कुल, रुबी भ्याली स्कुल र हिमशिखर स्कुललाई बधाई व्यक्त गर्दै उत्कृष्ट नतिजाको लागि प्रशंसा पत्र प्रमुख अतिथिद्वारा प्रदान गरिएको थियो । साथै सदस्य विद्यालय यूनिटी स्कुलका आशिष् थापा क्षत्रीले २०८० को एसईईमा ४ जिपिए ल्याउन सफल भएकोमा संस्थाद्वारा बधाई एवं सम्मान पत्र प्रदान गरी अभिनन्दन गरिएको थियो । यसै गरी नेसनल प्याव्सन भक्तपुरका सदस्य विद्यालयहरुमध्ये २०८०, कक्षा ८ को आधारभूत तह (बिएलई) मा उत्कृष्ट जिपिए ल्याउने मदरल्याण्ड स्कुल, ईडेन गार्डेन स्कुल, डेमोस स्कुल, विमल मेमोरियल स्कुल, सेन्ट जोन स्कुल र यूनिटी स्कुलका १२ जना विद्यार्थीहरु र स्कुललाई प्रशंसा पत्र एवं अभिन्नदन गरिएको थियो ! बधाई तथा अभिनन्दन कार्यक्रमका सभापति एवं नेसनल प्याव्सन भक्तपुरका अध्यक्ष संजय खड्काले २०७२ मा ग्रेडिगं सिस्टम सुरु भएपछि एसईईमा नपढे नि उत्तीर्ण भइन्छ भन्ने मानसिकता विद्यार्थी, शिक्षक र अभिभावकलाई पर्न गएको र कुनै पनि विद्यार्थीले कक्षा दोहोराउन नपर्ने भन्ने भ्रमले गर्दा समग्र देशभरकै २०८० को एसईई मा २०७८ मा निर्णय भएको अक्षराकं पद्धति अनुसार एनजि आउने सिस्टमले ५०% भन्दा कम उत्तीर्ण भएका हुन् ! “अगाडि बढ्न हिड्नु नै पर्छ, नहिडी पुगिदैन” तसर्थ आगामी दिनमा विद्यार्थी, शिक्षकलगायत सबै सरोकारवाला पक्षहरुले उत्कृष्ट नतिजाको लागि भूमिका खेल्नु पर्ने बताउँदै यो कार्यक्रम आयोजना गरिएको जानकारी दिए । कार्यक्रममा प्रमुख अतिथि निर्देशक नन्दलाल पौड्यालले विद्यार्थीहरुलाई आफूले सक्ने विषय कक्षा ११ मा पढ्न आग्रह गरे । उनले नेसनल प्याव्सन भक्तपुरले विद्यार्थीलाई हौसला दिने र स्कुल एवं शिक्षकहरुलाई प्रोत्साहन गर्ने गरी एसईई बधाई तथा अभिन्नदन कार्यक्रम गरेकोमा धन्यवाद व्यक्त गरे । साथै उनले उत्कृष्ट नतिजाको लागि शिक्षकहरुले पाठ्यक्रम र विद्यार्थीहरुको क्षमतालाई समेत ध्यानमा राखी आफ्नो सक्षमता देखाउनु पर्ने र मिहिनेत गर्नु पर्नेमा जोड दिएको थियो ! सो कार्यक्रममा सूर्यविनायक नगरशिक्षा शाखा प्रमुख रत्न बहादूर कटवालले नेसनल प्याव्सन भक्तपुरले गरेको कार्यक्रमको प्रशंसा गर्दै एसईई उत्तीर्ण विद्यार्थीहरुलाई नेपालमा नै बस्ने र पढ्ने सोच बनाई अगाडि बढ्न सुझाव दिए । अर्का अतिथि चाँगुनारायण नगरशिक्षा शाखा प्रमुख दिनेश अर्यालले विद्यार्थी एवं विद्यालयले आगामी दिनहरुमा अझ मिहिनेत गर्नमा यस्तो कार्यक्रमले ठूलो भूमिका खेल्ने जनाए । कार्यक्रममा नेसनल प्याव्सन केन्द्रीय सहकोषाध्यक्ष विक्रम ढुकुछु, केन्द्रीय सदस्य जिबि खड्का, बागमती प्रदेश सहकोषाध्यक्ष साँधुराम गैडा, मिडभ्याली कलेजका प्रिन्सिपल गोविन्द बल्लभ लगायतले बधाई तथा शुभकामना दिएको थियो ! नेसनल प्याव्सन भक्तपुरका सचिव कुमार थापाले संचालन गरेको उक्त कार्यक्रम मिड भ्याली कलेजको समन्वयमा सम्पन्न भएको थियो ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

– प्रेमचन्द

## सम्पादकीय

### संसदीय प्रणालीमा देखिएको गलत अभ्यास

नेपाली राजनीतिमा कहिले के हुन्छ ? कसैले अनुमान गर्न सक्दैन । यो देशको अस्थिर राजनीथिको कारण भइरहेको छ । हिजो प्रतिनिधि सभाको तेस्रो स्थानमा रहेको दल नेकपा माओवादीको नेतृत्वमा सरकार थियो । अहिले सबैभन्दा ठूलो दल नेपाली कांग्रेसको समर्थनमा दोस्रो स्थानमा रहेको नेपाल कम्युनिस्ट पार्टी (एमाले)का अध्यक्ष खड्गप्रसाद शर्मा ओली नेपालको संविधानको धारा ७६ (२) बमोजिम गत आइतवार चौथो पटक प्रधानमन्त्री नियुक्त भएका भएका छन् ।

प्रधानमन्त्री ओलीको चरित्र र प्रवृत्तिबाट नेपाली जनता अनभिज्ञ छैनन् । यसैले चौथो पटक नेपालको प्रधानमन्त्री भएपछि ओलीले चमत्कारै गर्लान् भन्ने अपेक्षा सम्भवतः उनी स्वयंले पनि गरेका नहोलान् । त्यस्तै, हालसम्म बनेका सरकारहरूले जनहितमा खासै उल्लेखनीय काम नगरेकाले पनि प्रधानमन्त्री बदलिँदैमा सरकारी कार्यशैलीमा जनमुखी परिवर्तनको आशा पनि जनताले गरेका छैनन् ।

प्रधानमन्त्री ओलीसँगै कांग्रेस, एमाले र अरु साना दलका गरी २१ जनाले मन्त्री पदको शपथ लिएका छन् । उक्त मन्त्रिपरिषद्मा विवादमा मुछिएका अनुहार पनि देखिएका छन् । यो मन्त्रिपरिषद् गठन संविधानको धारा ७६ को उपधारा (९) मा उल्लेख भएको 'समावेशी सिद्धान्त'को विपरित पनि रहेको छ ।

देश अहिले बाढी, पहिरो र डुबानको चपेटामा परेका छन् । सरकारले पीडित जनताको सहायता र सुरक्षाका निम्ति युद्धस्तरमा काम गर्नु जरूरी छ । प्रधानमन्त्री ओलीले 'सडकमा खाल्डो मैले खनेको हो र ?' भनेजस्तो बाढी पहिरो मैले ल्याएको हो र भन्न थाले भने जनमानसमा राज्यप्रति नै वितृष्णा बढ्नेछ ।

विगतमा उनले राज्यको ठूलो साधनस्रोत अपव्यय गराएका छन् । 'झिल्के विकास' भनिएका उरन्ठेउला संरचना खडा गर्न राज्यको ठूलो धनराशि मासिएको छ । यस्तै प्रवृत्ति अब पनि दोहोऱ्याएर राज्यको दुर्लभ स्रोतसाधनको दुरुपयोग नगरियोस् । प्रधानमन्त्री ओली स्वयंले आत्मसमीक्षा गरेर पुराना गल्तीहरु नदोहोऱ्याउने वाचा गर्नुपर्छ ।

पहिलो कार्यकालमा उनले प्रधानमन्त्रीका हैसियतमा भारतीय नाकाबन्दीका विरूद्ध देखाएको अडान सराहनीय थियो । यद्यपि, त्यसमा पनि जनताको कहरबाट शासकले मोहोर बनाएको गुनासो सुनिएको थियो । तर, नेपाली जनताले ओलीलाई उनको अडानका लागि पुरस्कृत नै गरेका थिए । ओली आफैँले जनताको प्रचण्ड बहुमत समाल्न सकेनन् । कोरोनाकालमा उनको सरकारले लिएका नीतिले देश आर्थिकरूपमा थला बसेको थियो । ओलीका निकट सल्लाहकारहरु आर्थिक विचारका दृष्टिले अनुदार परम्परावादी नै छन् । यद्यपि, नवनियुक्त अर्थमन्त्रीको छवि भने बजारमैत्री नै छ । अहिले गति लिन लागेको अर्थतन्त्रको गति नियन्त्रण गर्ने प्रयास नहोस् । त्यही कार्यकालमा ओलीमाथि 'यती, ओम्नी' काण्डको दाग लागेको हो ।

प्रधानमन्त्री ओलीमा सत्तामा छँदा पार्टी र आफ्नो नेतृत्वलाई संविधानभन्दा ठूलो ठान्ने प्रवृत्ति देखिएको थियो । 'पार्टी जोगाउन' पटकपटक संसद् भङ् अर्थात् असंवैधानिक काम गरेको त उनले सार्वजनिकरूपमै सकारेका छन् । सत्ताको लोभमा यस्ते गल्ती अब भने नगरुन् । उनका असंवैधानिक गल्ती अदालतले सच्याउला तर देशलाई भएको हानिको क्षतिपूर्ति त हुँदैन । यसैले प्रधानमन्त्री ओली थप संयमित र परिपक्व भइदिए हुन्थ्यो भन्ने जनअपेक्षा छ ।

संसद्का दुवै ठूला दल मिलेर सरकार गठन गरेका छन् । संसदीय प्रणालीमा यसलाई सही अभ्यास मानिदैन । किनकी संसदमा प्रतिपक्ष कमजोर भए लोकतन्त्रमा नै असर पुग्ने गर्दछ । छिमेकी मुलुक भारतमा भाजपा पक्ष दलहरूको संसदमा बहुमत भएकै कारण मोदी सरकार विपक्षलाई पेलेरै अगाडि बढेको थियो । तर भारतीय जनताले निर्वाचन मार्फत भाजपाको हैसियत देखाई दिए । यस्तै स्थिति ओली प्रधानमन्त्री कालमा पनि भएको थियो। तर ओलीको त्यो दम्भ जनताले तोदिदिएका छन् । पुन एक पटक संसदमा रहेको दुई दलका कारण संसद् कमजोर भएर सरकार निरंकुश हुनपुग्ने भय देखिएको छ। नेपालको राजनीतिका मुख्य प्रतिद्वन्द्वी दुई दल कांग्रेस र एमालेबीच तीव्र प्रतिस्पर्धा रहिआएको छ । यीमध्ये एउटाको चित्त नबुझ्नेबित्तिकै सरकार ढल्छ र फेरि उथलपुथलकै चरण सुरू हुन सक्छ ।

यसको परिणाम भने नेपाली जनताले भोग्नु पर्ने हुन्छ । किनकी दलका नेताहरू त सत्ता लिप्सामा रहने अनि त्यसको दुष्परिणाम जनताले भोग्नु पर्ने अवस्थाको अन्त्य हुन सकोस्।

# बाहिर झगडा, भित्र सहमतीको राजनीति

● रुषा थापा

जतातते मन्दी, ओली सरकारले फेरि सर्वसाधारण र देश डुबाउने पीर !

आइतबार बिहान ११ बजेतिर काठमाडौंको अनामनगरस्थित एक होटलमा दुई व्यक्ति चिया खान गए । होटल राम्रै थियो । त्यहाँको फर्निचर, सरसफाई र सजाटवट सबैलाई आकर्षित गर्ने खालको थियो । होटलमा गएका ती दुई ग्राहकले लेमन टिई खाए । र, दुईटा लेमन टिईको ७० रूपैयाँ भनियो ।

ग्राहकले सय रूपैयाँको नोट दियो । तर, ३० रूपैयाँ पनि नभएपछि होटल सञ्चालक बाहिर पैसा लिन गए । उनले करिब १५ मिनेट लगाएर पैसा ल्याए । अर्कोतर्फ, होटलमा ती दुई ग्राहकबाहेक अरू कोही पनि थिएन । होटल सुनसान थियो । मानौं कि दिनभर कोही आउँदैन । ग्राहक नआएपछि घर भाडा कसरी तिर्ने ? कसरी दैनिक खर्च धान्ने ? कसरी राज्यलाई कर तिर्ने ?

हामी मानिस भोक लागेपछि केही खान होटल जान्छौं । तर, खाने ठाउँमा त व्यापार छैन भने अन्य व्यापारव्यवसायको हालत के होला ? व्यापारीहरूको भनाइअनुसार बजार पूरै मन्दीमा छ । कोहीसँग पनि पैसा छैन । पैसा हुनेले पनि लुकाएका छन् । नहुनेसँग त हिजो पनि थिएन र आज पनि छैन । यहाँका ठुल्ठुला व्यापारी, कर्मचारी, नेताहरूले विदेशी बैंकमा पैसा राखेको बताइन्छ ।

नेकपा एमालेका अध्यक्ष केपीशर्मा ओली प्रधानमन्त्री नियुक्त भइसकेका छन् । उनको दुईवटै मिर्गौला फेरिएको छ । यसअघि प्रधानमन्त्री हुँदा उनी मिर्गौला फेर्न कहिले विदेशी अस्पताल त कहिले स्वदेशी अस्पतालमा धाएको अवगत नै छ । ओली ०४८ सालपछि विभिन्न मन्त्री हुँदै प्रधानमन्त्री भइसकेका व्यक्ति हुन् । उनी प्रधानमन्त्री हुँदा बालुवाटारमा बाँसुरी बजाएर बस्थे ।

पार्टी र मन्त्रिपरिषद्को बैठक समेत बालुवाटारमै राख्थे उनी । बालुवाटारमा तिजको कार्यक्रम राखेर नाचगान गर्नुका साथै उनले आफ्नो जन्मभूमिमा देशकै नक्सा केक बनाएर काटेर समेत खाए । जनतासँग आँखा र दिमाग दुवै छ । त्यसैले, ओलीले विगतमा प्रधानमन्त्री हुँदा गरेको कामको जनताले मूल्यांकन गरिसकेका छन् ।

अहिले मुलुकको अर्थ व्यवस्था नाजुक अवस्थामा पुगेको छ । बैंक तथा वित्तिय संस्था टाट पल्टिने अवस्थामा पुगेका छन् । लघुवित्त, सहकारी, फाइनान्स त डुबिपनि सकेका छन् । सहकारीले मात्र करोडौं बचतकर्ताको खर्बौं रकम खाएको छ । बचतकर्ताहरूलाई घर न घाटको बनाएको छ सहकारीले । जनता निराश हुँदै गएका छन् ।

नेपाली काँग्रेस र नेकपा एमाले आआफ्नो स्वार्थका लागि जोडिएको छरपष्ट भइसकेको छ । झापाको गिरिबन्धु टु स्टेटको सरकारी जग्गा दुरूपयोग गरेको आरोप लागिरहँदा ओलीले काँग्रेससँग हत्तपत्त सहमति गरे । यता, आफ्नी पत्नी आरजु राणालाई नक्कली भुटानी शरणाथी प्रकरणमा बचाउन सभापति शेरबहादुर देउवाले पनि काँग्रेसको सिद्धान्त, विचार र धारणा नै बिर्सिएर ओलीसँग सम्झौता गरे ।

अहिले सेयर दलालीहरू विष्णु पौडेल अर्थमन्त्री हुनासाथ बजार पहिलाकै अवस्थामा फर्किने भन्दै सर्वसाधारण फसाइरहेका छन् । यसअघि पौडेल अर्थमन्त्री हुँदा यसरी नै हल्ला फिँजाएर बैंकले सय रूपैयाँमा निष्काशन गरेको सेयर ३२ सय रुपैयाँ पुर्याएको थियो । ३२ सयमा किनेको सेयर सय रूपैयाँमा बिक्री नहुने अवस्था निम्तिएपछि ६५ लाख जनता चुलुम्मै भए ।

यसअघि अर्थमन्त्री हुँदा पौडेलले ६५ लाख जनतालाई सेयरमा लगानी गर्न लगाई सडक छाप बनाइदिएका थिए । र, यस पटक अर्थमन्त्री हुँदा कति लाखलाई बनाउनेछन् । पौडेल अर्थमन्त्रीबाट हटेपछि जर्नादन शर्मा, डा.प्रकाशशरण महत अनि वर्षमान पुन पनि अर्थमन्त्री बने । तर, तीन जनाको पालामा सेयरको मूल्य बढेन । अहिले जनता भन्छन्, 'ओली नेतृत्वको सरकार सय दिन पनि टिक्दैन ।'

अर्को रोचक कुरा सेयरमा पनि एमालेकै लगानी रहेको स्पष्ट भइसकेको छ । एमालेका विष्णु पौडेल अर्थमन्त्री हुनासाथ सेयरको मूल्य बढ्छ । र, अन्य पार्टीका नेताहरू अर्थमन्त्री हुँदा सेयरको मूल्य बढ्दैन । फेरि विष्णु पौडेल पनि कतिञ्जेल चाहि अर्थमन्त्रीमा टिक्ने होला र । एक दिन त उनले पनि कुर्सी छोड्नै पर्छ । अनि त्यतिखेर अहिले फेरि पोडेल अर्थमन्त्री हुँदा महँगोमा सेयर किनेकाहरू चुलुम्मै डुब्नेछन् ।

सर्वसाधारणको आँकडाअनुसार ओली सरकार सय दिन पनि टिक्दैन । सय दिनपछि ओली सरकार ढलेसँगै पौडेलको पनि अर्थमन्त्री पद गुम्छ । अनि सय रूपैयाँको सेयर ३२ सय हालेर किन्ने सर्वसाधारण पहिलाका लगानीकर्ता डुबेर सडकछाप भएको अवस्थामा पुग्नेछन् । इतिहास हेरौं पहिला गार्मेट, गलैंचा अनि फिल्म हलमा लगानी गर्नेहरू थुप्रा थिए ।

तर, सबै डुबे । यसपछि जग्गा प्लटिङ गर्नेहरूको पनि डुब्ने दिन आयो । सहकारीमा नाफा देखेपछि च्याउ उम्रिएझैं सहकारी खोलिन थाल्यो । यद्यपि, सहकारी पनि डुब्यो । होइन सहकारी मात्र डुबेन, करोडौं बचतकर्ता पनि डुबे । अहिले अटो शोरूमहरू समेत डुबेका छन् । यहाँ दलालीहरू नयाँ पोलिसी ल्याउँछन् अनि सर्वसाधारणलाई लगानी गर्न लगाई डुबाउँछन् । दलालीहरूले के सम्म गरेका छैनन् र । हिजो पाँच हजार आनामा बिक्री नहुने खेतीयोग्य जमिन खण्डीकरण गरी आनाकै ६०–७० लाखमा बेचिदिए । त्यति महँगोमा जग्गा किन्नेहर अहिले मर्नु कि बाँच्नु अवस्थामा पुगेका छन् । बेचौं मूल्य छैन, बैंकको ऋण तिरौं पैसा छैन । गाडीमा लगानी गर्ने सर्वसाधारण पनि यसरी नै डुबेका छन् ।

हिजो दुई लाखको सवार ीसाधन ३०–३५ लाखमा किन्ने सर्वसाधारण आज चुलुम्मै भएका छन् । अहिले पैसा हुनेका छोराछोरी अमेरिका, अस्ट्रेलिया, क्यानडालगायत विकसित मुलुक गएका छन् भने पैसा नहुनेका छोराछोरी खाडी पुगेका छन् । गाउँदेखि सहरै रित्तिएको छ । शेरबहादुर देउवाका छोरा अमेरिकामा पढेर नेपाल आए ।

तर, उनको नाममा सयौं रोपनी जग्गा रहेको बताइन्छ । जबकी उनी कुनै पनि व्यापार व्यवसायमा सलंग्न छैनन् । अमेरिकामा पनि उनले पढे मात्र । काम गरेनन् । शेरबहादुर देउवा पटकपटक प्रधानमन्त्री भइसके र अहिलेपनि प्रधानमन्त्री हुन पर्खिरहेका छन् । यता, उनकी पत्नीमाथि नेपालीलाई भुटानी शरणार्थी बनाएर अमेरिकामा बेचेको आरोप छ ।

यसरी कमाएको अवैध रकमले भने छोराको नाममा सम्पत्ति राख्ने गरिएको छ । अहिले काँग्रेसभित्र देउवा दम्पतीको विरोध गर्ने कोही छैन । विगतमा गिरिजाप्रसाद कोइराला पार्टीको सभापति थिए । तर, देउवाले पार्टी नै फुटाएर आफु प्रधानमन्त्री हुन ५२ वटा मन्त्रालय नै खडा गरे । काँग्रेसमा गगन थापा, डा.शेखर कोइराला बाहिर पनि कराउने हो ।

उनीहरू देउवा दम्पतीको अगाडि आत्मसमर्पण गर्छन् । एमालेमा पनि ओलीको विरोध कोही गर्न सक्दैन । यसअघि पनि पटकपटक प्रधानमन्त्री भइसकेका र भ्रष्टाचारको आरोप लागेका व्यक्तिहरू फेरि पनि प्रधानमन्त्री हुँदा देशमा के परिवर्तन हुन्छ ? जनताले कसरी सुख पाउँछन् ? यीनीहरूले आफुले गरेका काण्ड लुकाउन मात्र प्रधानमन्त्री बनेका हुन् ।

जनतालाई पनि यीनीहरू केही आशा छैन । जनता निराश छन् अनि काँग्रेस-एमालेका कार्यकर्ता खुशी छन् । आफ्नो सरकार आयो र फेरि भ्रष्टाचार गर्न पाइयो भनेर उनीहरू मख्ख छन् । अहिले सरकारी कर्मचारीहरू पनि खुशी छन् । किनकि आफ्नो पार्टीको सरकार आएसँगै भनेजस्तो ठाउँमा सरूवा, बढुवा हुन पाइयो नि त ।

काँग्रेस-एमालेका कार्यकर्ताले यो सरकारबाट थुप्रै चिज पाउलान् । तर, जनताले के पाउँछन् ? देशले के पाउँछ ? अहिले नेपालको विदेशी ऋण २७ खर्ब छ । तर, ओलीले केही महिनामै यसको दोब्बर-तेब्बर बनाइदिने छन् । यो सरकारले मुलुकको अर्थतन्त्रमा सुधार ल्याउँछ र बजार चलायमान हुन्छ भनेर जनतामा कुनै पनि आशा छैन । ओलीले पहिला पनि प्रधानमन्त्री हुँदा उखानटुक्का भनेरै जनतालाई अल्मल्याए । र, यसपटक पनि यही गर्ने छन् ।

अहिले साना दलहरू समेत सरकारमा सामेल हुँदैछन् । एउटा मन्त्रालय पाएपनि भ्रष्टाचार गर्न पाइने भएपछि आँखा चिम्लेर ओली सरकारलाई उनीहरू समर्थन गर्दैछन् । एमाले–माओवादीसहितको सरकार हुँदा केही महिनाअघि काँग्रेसले सहकारी प्रकरणमा संसदीय विशेष छानबिन समिति गठन गर्नुपर्ने माग गर्दै सदन अवरोध गर्यो ।

सो क्रममा काँग्रेसका नेता धनराज गुरुङ र ओलीबीच सदनमै भनाभन समेत परेको थियो । त्यतिबेला एकअर्कालाई देखी नसकेका यीनी आज मिलेका छन् । यो जनता र सञ्चारकर्मीको आँखामा छारो हालिएको हो । बाहिर झगडा गर्ने अनि भित्र मिल्ने । राजनीतिक दलहरूमा देश र जनताभन्दा पनि सत्ता नै ठुलो भयो । जनता मरेपनि बाँचेपनि कसैलाई मतलब छैन ।

देशमा रोजगारी नभएपछि दिनहुँ हजारौंको संख्यामा नेपाली युवाहरू खाडी विदेशिएका छन् । ती जनताले रगतपसिना बगाएर पठाएको रेमिट्यान्सका यहाँ नेताहरू मोजमस्ती गर्छन् । अनि कसरी लाग्छ देश उभो ? कसरी पाउँछन् जनताले सुख ? भक्तपुर

TIMES

वर्ष १८ अङ्क ०१ २०८१ साउन ०२ गते बुधबार

17 July 2024 Wednesday



# संविधान संशोधनबाट अधिकार कटौती गरिए मधेशीलगायतका समुदायले आन्दोलन गर्ने

काठमाडौं । विदेशमा बस्ने नेपालका मधेशीहरुको छाता संगठन मधेशी एकता समाजले असार २७ गते बिहीबार काठमाडौंमा एउटा अन्तर्क्रिया कार्यक्रम सम्पन्न गरेको छ ।

मुलुकका दुई ठूला पार्टीहरु नेपाली कांग्रेस र नेकपा एमालेले अचानक नयाँ सत्ता गठबन्धन निर्माण गरेर संविधान संशोधन गर्ने एजेण्डा बाहिर ल्याएपछि मधेशी एकता समाजले 'सम्भावित संविधान संशोधनः मधेशी र अन्य सीमान्तकृत समुदायका सरोकारहरु' विषयक अन्तरक्रिया आयोजना गरेको हो ।

अन्तर्क्रियामा राजनीतिक विश्लेषक सीके लालले संविधान धार्मिक ग्रन्थ नभएर राजनीतिक दस्तावेज भएकोले त्यसमा परिमार्जन हुनु अन्यथा नभएको बताए ।

पछिल्लो संविधान कुनै किसिमले संविधान कहलाउने खालको नभएको जिकीर गर्दै विश्लेषक लालले मधेशको अधिकार र सम्मानका लागि मात्रै मधेश विद्रोह नभएको र सीमान्तकृत समुदायहरुको भावना विपरीत संविधान निर्माण भएकोले मधेश आन्दोलित भएको स्मरण गरे ।

'पहिलो संविधानसभा संविधानसभा थियो । दोस्रो संविधानसभा विधायिका थियो, जसले संविधान निर्माण गर्‍यो । बहुमतको रोलरले संविधान जारी गरिएकोले त्यसको विरोध गर्दा मधेशमा एक सय जना सहिद भए,' लालले भने ।

पछिल्लो दशकमा राजनीतिक स्थायित्व नभएकोले संविधान संशोधनको वकालत गर्न थालिएको उल्लेख गर्दै उनले साँचो अर्थमा यो संविधान नभएकोले यसमा संशोधन के हुने भन्ने प्रश्न रहेको बताए ।

'जसले संविधान निर्माण गरे उनीहरुलाई लाग्यो कि केही बढी दिइयो । त्यसैले ती घटाउनका लागि संविधान संशोधन गर्न लागिएको छ,' भन्दै लालले संविधानबाट असन्तुष्ट मधेशका राजनीतिक शक्तिहरु पछिल्लो १० वर्ष चुपचाप बसेकाले अधिकार कटौती गर्नका लागि कांग्रेस र एमालेले संशोधनको दुस्साहस गरेको धारणा राखे ।

'यस संविधानलाई अभियन्ताको दृष्टिबाट हेर्दा नेता र अभियन्ताहरु संविधान बन्दा पहिलो पटक हारे । अर्को पटक हारेर बिसं २०७४ को चुनावमा सामेल भए । बि.सं २०७९ को निर्वाचनमा तेस्रो पटक जुठो पात उठाउन र जुठो खानका लागि उनीहरु तयार भए,' उनको धारणा थियो ।

उनले अगाडि भने, 'हाम्रा नेताहरु चोर निस्किए । अधिकार र सम्मानको संघर्षमा तत्काल परिणाम निस्किँदैन । तपाईहरु लामो संघर्षका लागि तयार हुनुस् ।' मधेशका मतदाताले दस प्रतिशत मत मधेशआश्रित पार्टीहरुलाई दिने गरेको र ९० प्रतिशत मत खसवादी पार्टीहरुलाई दिने गरेको तर जवाफदेहिता मधेशआश्रित पार्टीबाट खोज्नु गलत रहेको उनले बताए ।

दक्षिण अफ्रिकाको रंगभेद हटाउन लामो समय लागेको, भारत स्वतन्त्र भएको ७० वर्षपछि पनि दलित अधिकारको संघर्ष जारी रहेको तथा मुस्लिम सम्मानको संघर्ष पछाडि फर्किएको चर्चा गर्दै लालले नेपालमा राज्यबाट सीमान्तकृत र बहिस्कृत हुनेहरु लामो लडाईंका लागि तयार रहनुपर्ने धारणा राखे ।

नेपालमा मधेशी स्थायी अल्पसंख्यक हुन्, त्यसैले मधेशीको हातमा सत्ता आइहाले पनि प्रथम राष्ट्रपतिलाईजस्तै माटोको मुर्ति बनाएर शासक वर्गले मधेशीहरुबाट आफ्नो स्वार्थ पूरा गर्ने उनको भनाइ थियो ।

उनले अगाडि थपे, 'संघर्षले मधेशी र अन्य सीमान्तकृत समुदायको आत्मविश्वास र आत्मसम्मान बढ्ने छ । विस्तारै आत्मविश्वास र आत्मसम्मान बढेपछि क्रमशः राजनीतिक शक्ति पनि बढ्ने छ । त्यसैले अधिकार र पहिचानका लागि संघर्ष त्याग्नुहुँदैन ।'

राजनीतिक शास्त्रका प्राध्यापक डा. कृष्ण हाछेथुले मधेशी, जनजातिलगायतका सीमान्तकृत समुदायले चाहेकोजस्तो संविधान संशोधन नहुने आकलन गरे । राष्ट्रिय राजनीतिको साँचो कांग्रेस र एमालेजस्ता परम्परावादी पार्टीहरुको हातमा रहेकोले भन्दै डा. हाछेथुले सीमान्तकृत समुदायले सोचेकोभन्दा विपरीत दिशामा संविधान संशोधन हुने धारणा राखे ।

संविधान संशोधनले अर्को जनआन्दोलनको अवस्था उत्पन्न हुन सक्ने भविष्यवाणी गर्दै हाछेथुले प्रतिगामी रुपमा संविधान संशोधन गरेर कांग्रेस र एमालेले मधेशी र जनजातिजस्ता सुतिरहेको बाघलाई जगाउन सक्ने अवसरको रुपमा यसलाई हेर्नुपर्ने धारणा राखे ।

तर मधेशका अहिलेका नेताबाट त्यस्तो आन्दोलन सम्भव नरहेकोले नयाँ राजनीतिक शक्ति उदाउन सक्ने उनको भनाइ थियो । उनले अगाडि भन्नुभयो, 'चाहदाचाहदै पनि संविधान संशोधनका लागि उनीहरुले आँट गर्न नसक्ने सम्भावना समेत छ । तर यो संविधान अधुरो र अपुरो छ भन्ने भाष्यलाई बलियो बनाउनका लागि यस अवसरलाई सदुपयोग गर्नुपर्छ ।'

त्यसैगरी मधेशी अभियन्ता एवं अध्येता तुलानारायण साहले भने, 'समानुपातिक निर्वाचन प्रणालीको कारणले राजनीतिक अस्थिरता भएको होइन । यस प्रणालीले खसआर्यको प्रतिनिधित्व घटाएकोले यसलाई हटाउन खोजिएको छ ।'

समानुपातिक प्रणालीलाई समाप्त गर्ने प्रपञ्च गरिएको वा यस प्रणालीलाई राष्ट्रिय सभामा लग्ने तयारी गरिएको हुन सक्ने साहको अनुमान थियो । साहले अगाडि थपे, 'यसले मधेशी, जनजाति, दलित र महिलालगायतका सीमान्तकृतको प्रतिनिधित्व घटने छ । खस आर्यको प्रतिनिधित्व फेरि मजबुत हुने छ । यसरी राजनीतिक सत्ताको नियन्त्रणमा खसआर्यको पकड अझै बलियो हुने छ ।'

थारु र मुस्लिमसहित ३३ प्रतिशत मधेशी समुदायको राजनीतिक प्रतिनिधित्व एवं हैसियत कसरी घट्यो तथा खसआर्य समुदायको राज्यसत्तामा प्रभुत्व कसरी बढ्यो भन्ने अध्ययनको विषय रहेको उहाँको भनाइ थियो ।

'नागरिकता समस्या अहिले पनि समाधान भएको छैन । भाषासम्बन्धी माग, जिल्लाहरुको विभाजन, निर्वाचन प्रक्रिया र लोक सेवा आयोगको निर्माण, प्रशासनमा भर्ना प्रक्रिया तथा भूमिसुधारमार्फत् कसरी मधेशीहरुको जमिन खोसियो एवं शिक्षा नीतिको विषयमा ऐतिहासिक अध्ययन नगरेसम्म मधेशी कसरी मुलुकमा सीमान्तकृत भयो भन्ने बुझ्न सकिँदैन,' साहको तर्क थियो ।

असार १७ गते संविधान संशोधनको विषयमा सहमति भएको तर त्यो सार्वजनिक नगरिएको बताउँदै उनले समानुपातिक निर्वाचन प्रणालीसम्बन्धी काँग्रेस र एमालेबीच भएको सात बुँदे सहमति काँग्रेसको पार्टी बैठकमा पढेर सुनाइएको जानकारी दिए ।

उनले समानुपातिक निर्वाचन प्रणाली लागु भएपछि मुलुकमा राजनीतिक स्थीरता नभएको भन्ने भाष्य गलत रहेको बताए । राजनीतिक निकायमा सीमान्तकृत समुदायलाई समानुपातिक सहभागिताका लागि समानुपातिक निर्वाचन प्रणाली अपनाइएको उनको भनाइ थियो ।

'बि.स. २०६४ सालमा ६० प्रतिशत अप्रत्यक्ष रुपमा निर्वाचित भएर आउने समानुपातिक निर्वाचन प्रणालीलाई घटाएर नयाँ संविधानमार्फत् ४० प्रतिशतमा झारियो । अहिले खस आर्यको प्रतिनिधित्व बढेर ५० प्रतिशतको हाराहारीमा पुगेको छ,' उनले जानकारी दिए ।

'बि.सं २०१५ सालमा कांग्रेसको दुईतिहाइ बहुमत थियो । तर राजनीतिक स्थीरता भएन । पञ्चायती व्यवस्थामा पनि कुनै सरकार पाँच वर्ष टिक्न सकेन । बि.सं २०१५ सालदेखि बि.स. २०४७ र २०५६ सालमा पनि कांग्रेसकै बहुमत हुँदा समेत राजनीतिक स्थिरता भएन ।' साहले भने ।

समानुपातिक निर्वाचन प्रणालीअन्तर्गत् बि.स. २०७४ मा एमाले र माओवादीले गठबन्धन गरेर चुनाव लड्दा र लगभग दुई तिहाइ बहुमत ल्याउँदा समेत मुलुकमा राजनीतिक स्थिरता नभएको जिकीर गर्दै उनले राजनीतिक अस्थिरताका लागि समानुपातिक प्रणालीलाई दोष दिन नसकिने बताए । यस्तै मधेश अभियन्ता राकेश मिश्राले राजनीतिक प्रक्रिया वा निर्वाचन प्रक्रियाबाट मधेशका समस्याको समाधान हुनेमा पहिले विश्वास थियो तर अब त्यो विश्वास लगातार घटिरहेको बताए । बहुमतीय प्रक्रियाबाट मधेश समस्याको समाधान हुनेमा आफूलाई विश्वास नरहेको भन्दै मधेशको अधिकारका लागि अर्को आन्दोलनको आवश्यकता रहेको उनको भनाई थियो ।

'पछिल्ला दुई निर्वाचनमा मैले मतदान गरेको छैन । यो संविधानको रुप र सार मलाई स्वीकार्य छैन । सबै सारवस्तुलाई परिवर्तन गरेपछि मात्रै मलाई मान्य हुन्छ,' उनको भनाइ थियो । दर्जनौं मधेशीलाई सहिद बनाएर ल्याइएको संविधानलाई आफूले कसरी मान्ने, मधेशीमाथि गोली चलाएर ल्याइएको संविधानलाई उपलब्धि कसरी ठान्ने भन्ने प्रश्न गर्दै उनले अगाडि थपे, 'संविधान निर्माणको पूरै प्रक्रियालाई याद गरौं । पछिल्लो आठ वर्षमा हामीले के पायौं, के गुमायौं र हामीले के गर्‍यौं ।'

विश्वको महानतम् प्रक्रियाबाट संविधान ल्याइएको भनिए पनि आफूलाई विश्वकै क्रुरतम् प्रक्रियाबाट संविधान घोषणा गरिएको लागेको उनको भनाइ थियो । उनका अनुसार सय जना मधेशीलाई मारेर ल्याइएको संविधान कदापि स्वीकार्य हुन छैन ।

केही राम्रा कुराहरु भुलवश लेखिएको र ती दफाहरुलाई संविधान संशोधनको प्रपञ्चबाट हटाउन थालिएको तथा धर्मनिरपेक्षता समेत उनीहरुले हटाउन सक्ने उनको आशंका थियो ।

मिश्राले प्राप्त उपलब्धि रक्षा हुने बताएर मधेशकेन्द्रीत पार्टीहरुले निर्वाचन प्रक्रियामा सहभागी भएको भन्दै पछिल्ला आठ वर्षमा कुनै पनि उपलब्धि रक्षा नभएको जिकीर गरे ।

मधेशीहरुलाई मारेर ल्याइएको संविधानअन्तर्गतका निर्वाचनमा सहभागी भएर हामी आममधेशीले पनि गद्दारी गरेको भन्दै उनले सबभन्दा प्रभावकारी उपाय भनेको यस संविधानअन्तर्गत हुने चुनावी प्रक्रियामा भाग नलिन आग्रह गरे ।

संविधान संशोधनभन्दा यसलाई खारेज गरेर नयाँ संविधान बनाउनुपर्ने उनको अडान थियो ।

त्यसैगरी थारु आन्दोलन एवं नागरिक पहिलो अभियानका अभियन्ता सुरेन्द्र चौधरीले राष्ट्रिय पार्टी बन्नका लागि थ्रेसहोल्ड बढाएर १० प्रतिशत गरे भने मधेशी, जनजाति र थारुका पार्टीहरु मर्ज हुने अवस्था आउने र त्यसले ठूला पार्टीहरुका लागि चुनौति थपिने धारणा राखे ।

संविधान संशोनमार्फत् ठूला पार्टीहरुले थ्रेसहोल्ड बढाएमा तीन प्रतिशत कटाएका मधेशवादी पार्टीहरु र थारु पार्टीहरु मिल्ने अवस्था आउने भन्दै अभियन्ता चौधरीले मधेशी, जनजाति र थारुका लागि नयाँ अवसरको ढोका खुल्ने बताए । शासक वर्गले थारु र मधेशीलाई लडाउन खोजे, उनीहरु लडे तर पछि कमजोरी महसुस गरी मधेशी र थारु अधिकारका लागि सहकार्य गर्न नजिक आउन थालेको उनको भनाइ थियो ।

उनले टीकापुर घटनामा कांग्रेस र एमालेले घुसपैठ गरेर घटना गराएको आरोप लगाए । आन्दोलनमार्फत् समाजलाई जोड्ने मधेशी र थारु भएको तर देश विखण्डन गर्ने तत्व कांग्रेस र एमाले भएको आरोप लगाउँदै चौधरीले देश जोड्ने थारु र मधेशीले हिमाल र पहाडलाई समेत जोडेर नयाँ आन्दोलन गर्नुपर्ने धारणा राखे ।

मुस्लिम एवं महिला अभियन्ता सीमा खानले मधेशी र जनजातिलगायतका सीमान्तकृत समुदायहरु यस संविधानबाट सन्तुष्ट नरहेको बताउँदै उनीहरुको मागअनुसार संविधान संशोधन गर्न ध्यानाकर्षण गरे ।

'मधेशी र जनजातिलगायतका सीमान्तकृत समुदाय यस संविधानबाट सन्तुष्ट छैनन् । संविधान संशोधन गरेर मुस्लिमका विशेष अधिकार र मधेशी एवं जनजातिले उठाउँदै आएका माग सम्बोधन गर्नुपर्छ,' अभियन्ता खानको भनाइ थियो ।

खानले संविधानमा सुनिश्चित गरिएका अधिकारहरु कार्यान्वयन नगरिएको सन्दर्भमा संविधान संशोधन गर्न खोज्नु शंकास्पद रहेको बताए । संविधान संशोधनबाट अधिकार कटौती गरिए मधेशी र मुस्लिम मिलेर थप अधिकारका लागि आन्दोलन गर्ने उनको भनाइ थियो ।

यस्तै, मधेशी एकता समाजको नेपाल च्याप्टरकी अध्यक्ष डा. बबी सिंह यादवले संशोधन मधेशीहरुको मुद्दा रहेको र प्रगतिशील रुपमा संशोधन हुनुपर्ने धारणा राखे । प्रतिगामी रुपमा संविधान संशोधन गरिए मधेशी र अन्य सीमान्तकृत समुदाय आन्दोलनका लागि तयार रहनुपर्ने भन्दै अध्यक्ष यादवले एकता समाजको तर्फबाट आफूहरु आन्दोलनमा होमिने प्रतिबद्धता व्यक्त गरे ।

त्यसैगरी एकता समाजका संस्थापक अध्यक्ष डा. रविन्द्र कुमार यादवले मधेशमा अधिकार प्राप्तिको आन्दोलनलाई आफ्नो संस्थाले निरन्तर सहयोग गरिरहेको बताए । संस्थापक अध्यक्ष यादवले मधेशका मुद्दालाई अन्तर्राष्ट्रियकरण गर्नमा समेत संस्थाले सहयोग गरेको जानकारी दिए । मधेशीलगायत हजारौं मानिसको बलिदानबाट स्थापित संविधानसभाबाट नयाँ संविधान जारी गरिएको र संशोधनबाट मधेशीलगायतका सीमान्तकृत समुदायका अधिकार कटौती गर्न लागिएको भन्ने अनुमानहरुका बीच यो कार्यक्रम आयोजना गरिएको उनले बताए ।

## वर्षायाममा यी ६ सागसब्जीले रोग प्रतिरोधात्मक क्षमता बलियो हुन्छ ।

वर्षायाममा खानै पर्ने तरकारी : वर्षायाममा खानपानमा ख्याल नगरे पानीजन्य रोग, खानाबाट हुने रोग, हावाबाट हुने रोग, संक्रमण आदि समस्या हुन सक्छ । यस्तो अवस्थामा बाहिरको कुनै पनि खानेकुरा खानबाट जोगिनुपर्छ । यो सिजनमा सडक छेउका गाडा र खाद्य पसलमा बिक्री हुने वस्तुमा सरसफाईको ख्याल गरिदैन । यदि तपाई स्वस्थ रहन चाहनुहुन्छ भने मनसुनमा घरको खाना खानु नै उत्तम उपायमा पर्छ । यसमा हरियो सागसब्जी र फलफूल पनि बढी समावेश गर्दा अझ राम्रो । केही तरकारी यस्ता छन्, जसको सेवनले वर्षामा इन्फेक्सन, पेट दुख्ने आदि समस्याबाट बच्न सकिन्छ । जानौं वर्षामा कुन तरकारी खानुपर्छ ।

इन्डियन एक्सप्रेसमा प्रकाशित समाचार अनुसार वर्षाको समयमा हामीले ती तरकारीहरू खानुपर्छ जसको बोक्रासमेत शरीरको लागि फाइदाजनक हुन्छ । यस्तो अवस्थामा तिनीहरू ब्याक्टेरिया, फङ्गस र कीटाणुबाट मुक्त हुन्छन् । फाइबरयुक्त खानेकुरा जस्तै लौकी, लौका, टिन्डा, परवल, गुच्छा, तरुल, लौकी, गाजर, हरियो मटर आदिको सेवन गर्नुपर्छ । अन्य तरकारी विकल्पहरू मध्ये, तपाई काकडी, टमाटर, सेम, रामतोरीया, मूली पनि खान सक्नुहुन्छ। यिनीहरू प्रकृतिक क्षारीय पदार्थ हुन्छन्, जसले व्यक्तिको रोग प्रतिरोधात्मक क्षमतालाई बढाउँछ ।

लौकी- कतिपय मानिसले लौका देख्नेबित्तिकै नाक खुम्चिन थाल्छन् । उनीहरुलाई यसको स्वाद मन पर्दैन तर वर्षायाममा लौकीको सब्जी खानु निकै फाइदाजनक हुन्छ । यसले पाचनलाई हानि गर्दैन । भिटामिन सी र आइरनले भरपूर लौकाले वर्षाको कारण हुने संक्रमणबाट बचाउँछ ।

करेला - करेला स्वादमा तितो हुन्छ र यो तरकारी खानबाट तपाई भाग्नुहुन्छ तर यसमा पाइने एन्टि ब्याक्टेरियल गुणले तपाईको शरीरलाई संक्रमणबाट बचाउने काम गर्छ । यसमा आइरन पाइन्छ जसले शरीरमा एनिमिया हुनबाट बचाउँछ । साथै, यसले रगतलाई पनि शुद्ध बनाउँछ ।

लेडीफिंगर- वर्षायाममा धेरै रामतोरियाको सेवन गर्न सक्नुहुन्छ । यो तरकारी वर्षैभर पाइने भए पनि वर्षायाममा बढी सेवन गर्नुपर्छ । कोलेस्ट्रोल उच्च छ भने यो तरकारी खान सक्नुहुन्छ । यसले मुटुलाई स्वस्थ राख्छ । हड्डी बलियो हुन्छ ।

लौका- लौका खाँदा शरीरमा एनिमिया हुँदैन । फाइबर, भिटामिन, पानी आदि प्रशस्त मात्रामा पाइने लौलालाई लौका, लौका र झिमनी तरकारी पनि भनिन्छ । फाइबरयुक्त यो तरकारीले पाचन प्रणालीलाई स्वस्थ राख्छ । यो तरकारी संक्रमणको समस्याबाट टाढा रहन प्रभावकारी हुन्छ ।

टमाटर - अमिलो रातो टमाटर बिना दाल र तरकारी नरम देखिन्छ । टमाटर बिना धेरै चीजहरू राम्रो लाग्दैन । वर्षायाममा टमाटर प्रशस्त खाने । भिटामिन सी पाइने भएकाले यसले रोग प्रतिरोधात्मक क्षमतालाई मजबुत राख्छ । यसलाई सलाद, सुप, तरकारी, दाल, जुस आदिको रुपमा सेवन गर्न सकिन्छ । यसमा एन्टिअक्सिडेन्ट लाइकोपीन हुन्छ, जसले मुटुलाई स्वस्थ राख्छ । क्यान्सर हुनबाट बचाउँछ ।

परवल - वर्षायाममा मानिसलाई चिसो, खोकी र टाउको दुख्ने समस्या हुन्छ । परवल खाँदा यी समस्याबाट टाढा रहन्छ । यो तरकारीमा एन्टिअक्सिडेन्ट, भिटामिन ए र सी प्रचुर मात्रामा पाइन्छ जसले रोग प्रतिरोधात्मक क्षमता बढाउन मद्दत गर्छ ।

## बालबालिकाको आँखामा यी ५ लक्षण देखिए सचेत रहनुहोस्

एजेन्सी । बालबालिकामा आँखाको सङ्क्रमणका लक्षणः मनसुनको दिनमा धेरै प्रकारका सङ्क्रमणको जोखिम बढ्छ । यो मौसममा बालबालिकादेखि वयस्क सबै रोगको सिकार हुन सक्छन् । आँखाको संक्रमण पनि यो मौसममा सर्ने रोग हो । यो रोगको एउटा समस्या केटाकेटीसमेत सजिलै यसको सिकार हुने गर्दछ । आँखाको इन्फेक्सनका कारण बालबालिकालाई असहजता बढ्ने र दैनिक काम गर्न गाह्रो हुने गर्दछ । उनीहरुलाई आँखा चिलाउने र आँखा सम्बन्धी अन्य समस्या देखिन थाल्छ । तर, धेरै पटक बालबालिकाले आँखामा संक्रमण भएको बुझ्दैनन् । यस्तो अवस्थामा के गर्न सकिन्छ ? यस्तो अवस्थामा आमाबाबुले बालबालिकामा आँखाको संक्रमणका केही लक्षणहरूबारे जान्नुपर्छ र यी सङ्क्रमणहरू फैलनुअघि नै तिनीहरूलाई सुरक्षित राख्नुपर्छ । बच्चाहरुमा आँखा संक्रमण को लक्षण

१. रातोपन को निरन्तरता

यदि बच्चाको आँखामा लगातार रातोपन छ भने, आमाबाबुले यो हुनुको पछाडि कुनै कारण छ भनेर बुझ्नुपर्छ । तर, आँखामा चोटपटक लाग्दा, कीराले टोक्दा वा आँखामा एक्कासी कुनै वस्तु पसेको कारणले आँखा रातो हुन सक्छ । तर, जब यो हुन्छ, केहि समय पछि रातोपन स्वतः कम हुन्छ । यदि लामो समयसम्म रातोपन रहिरहन्छ, र बच्चाले पनि आँखामा दुखाइको गुनासो गर्छ भने, यो चोट वा संक्रमणको कारण हुन सक्छ भनेर बुझ्नुपर्छ । यो संक्रमणको धेरै लक्षण मध्ये एक हो ।

२.आँखाबाट पानी आउने

यदि बच्चाको आँखाबाट लगातार पानी बगिरहेको छ । जबकि, यसअघि यस्तो भएको थिएन । यसले पनि गम्भीर समस्याको संकेत गर्छ । बच्चाको आँखामा बिना कारण पानी आउनु ठीक होइन भन्ने कुरामा ध्यान दिनुहोस् । हो, कहिलेकाहीँ आँखामा हावा चल्दा वा लामो समयसम्म आँखा झिम्क्याउन नसक्दा आँखाबाट पानी बग्न सक्छ । यसबाहेक संक्रमणका कारण पनि यस्तो हुन सक्छ ।

घ. आँखामा चिलाउने

आँखामा बारम्बार चिलाउने वा जलन हुनु पनि आँखाको संक्रमणको लक्षण हो । यदि तपाईंको बच्चाले लगातार आफ्नो आँखा रगडिरहेको छ र आँखा चिलाउने गुनासो छ भने, यो राम्रो छ कि तपाईं सतर्क रहनुहोस् । सामान्यतया, आँखामा चिलाउने कुनै गम्भीर रोगको संकेत गर्दैन । तर, यदि आँखामा चिलाउने समस्या लामो समयसम्म रहन्छ र बारम्बार जलन महसुस हुन्छ भने, डाक्टरसँग परामर्श लिनु राम्रो हुन्छ । यस विषयमा जोखिम लिनु हुँदैन ।

४. आँखाबाट डिस्चार्ज

आँखाको संक्रमणका कारण कहिलेकाहीँ मानिसको आँखाबाट पानीसँगै पहेँलो वा हरियो स्राव निस्कन्छ । यो चिन्हको बारेमा लापरवाह हुनु ठीक होइन । मूलतया, यसले ब्याक्टेरियल कन्जेक्टिभाइटिसलाई संकेत गर्छ । आँखाबाट पानी बग्ने कारणले आँसुको नली अवरुद्ध हुन्छ । टियर डक्टलाई टियर डक्ट भनिन्छ । जब यो अवरुद्ध हुन्छ, टाँसिएको डिस्चार्ज आँखाबाट बाहिर निस्कन्छ ।

५. प्रकाशप्रति संवेदनशीलता

यो मौसममा धेरै प्रकारका आँखाको संक्रमण हुन सक्छ । सामान्यतया, प्रकाशप्रति संवेदनशीलतालाई फोटोफोबिया भनिन्छ । यो धेरै प्रकारको संक्रमणसंग सम्बन्धित देखिन्छ । यसको मतलब यो हो कि यदि तपाईंको बच्चालाई यस्तो समस्या छ भने, तपाईंले बुझ्न सक्नुहुन्छ कि यो आँखाको संक्रमणको कारण हो ।

वर्ष १८ अङ्क ०१ २०८१ साउन ०२ गते बुधबार
17 July 2024 Wednesday
थिमि TIMES

# क्रिप्टो माइनिङको अखडा बन्यो सीटीईभीटी

काठमाडौं । नेपाल प्रहरी प्रधान कार्यालयको उजुरी छानबिन शाखामा एउटा ईमेल आयो । ईमेलमा सीटीईभीटी अन्तर्गतको टीटी (त्क्त्क्ष-त्चबष्लष्लन क्ष्लकतष्तगतभ ायच त्भअजलष्अबी क्ष्लकतचगअतष्यल) शाखाको आईटी बिल्डिङमा गैरकानुनी तरिकाले क्रिप्टो माइनिङ भइरहेको दाबी गरिएको थियो ।

उक्त ईमेल १६ जेठ २०८१ मा केन्द्रीय अनुसन्धान ब्युरो (सीआईबी) लाई फरवार्ड गरियो । सीआईबीबाट १७ जेठमा प्रहरी नायब उपरीक्षक कुमार बस्नेतको कमान्डमा खटिएको प्रहरी टोली सीटीईभीटी अन्तर्गतको टीटी भवनमा रहेको आईसीटी ल्याबमा प्रवेश गर्‍यो । ल्याबमा कोही कर्मचारी नभए पनि त्यहाँका कम्प्युटरहरू प्रायः सबै अन थिए । 'कोही कर्मचारी पनि नभएको अवस्थामा किन सबै कम्प्युटर अन थिए ?' भन्ने विषय यो घटनामा सबैभन्दा महत्त्वपूर्ण पक्ष हो ।

विशेषगरी क्रिप्टो माइनिङ गर्नका लागि सयौं कम्प्युटरलाई एउटै सञ्जालमा जोडिन्छ । र, माइनिङ गर्ने एप्लिकेसन स्वतः ब्याकग्राउन्डमा चल्ने बनाइन्छ । यस्तो हुँदा कम्प्युटरमा सामान्य काम गर्दा त्यस्तो समस्या देखिँदैन । रातदिन कम्प्युटर अन छोडेर ब्याकग्राउन्डमा क्रिप्टो माइनिङसँग सम्बन्धित एप्लिकेसन रन भइरहेका हुन्छन् । यसबाट क्रिप्टोकरेन्सी आइरहेको हुन्छ । र, विद्युत त्यति नै बढी खपत भइरहन्छ । त्यसैले कोही नहुँदा पनि सबै कम्प्युटर अन हुँदा त्यहाँ क्रिप्टो माइनिङ भइरहेको सङ्केत देखिएको थियो ।

त्यहाँ प्रवेश गरेपछि प्रहरीले तीन ओटै आईसीटी ल्याब/सर्भर रुमभित्र रहेका कम्प्युटर जाँच्न थाल्यो । चेकजाँच गर्दा ती कम्प्युटरको फायरफक्स ब्राउजरभित्र गिटहब डटकम खोलिएको थियो । सो गिटहब पेजमा सीपीयू माइनर सर्च गरेको भेटियो । सीपीयू माइनर भनेको क्रिप्टो माइनिङ गर्ने प्रक्रिया हो । जहाँ क्रिप्टोकरेन्सीसँग सम्बन्धित कारोबारलाई सुरक्षित राख्न कम्प्युटरको सीपीयूको प्रयोग गरिन्छ ।

त्यसपछि प्रहरीले अर्को कम्प्युटर जाँच गर्न थाल्यो । त्यसमा सीपीयू माइनर सफ्टवेयर सञ्चालन रहेको देखियो । त्यो देखिसकेपछि प्रहरीलाई क्रिप्टो माइनिङ भइरहेको भन्ने आशंकामा थप प्रमाण भेटियो ।

सीआईबीको प्रतिवेदन अनुसार त्यहींको अर्को कम्प्युटरमा क्रिप्टो माइनिङसँग सम्बन्धित एक्स एमरिग ६.१६.४ माइनिङ (ह्ःच्म्न टाज्ञटाद्ध ५ष्लष्लन), स्टार्ट माइनिङ भेरस क्वाइन माइनिङ (कतबचत-५ष्लष्लन-खभचगक अयष्ल ५ष्लष्लन) र एसआरबी माइनर मल्टी २.३.९ माइनिङ एप्लिकेसन रन भएको देखियो । यी सबै क्रिप्टो माइनिङसँग सम्बन्धित एप्लिकेसन हुन् । यति भएपछि सीटीईभीको आईसीटी ल्याबमा क्रिप्टो माइनिङ भइरहेको देखियो ।

त्यस लगत्तै प्रहरी नायब उपरीक्षक बस्नेतको कमान्डमा खटिएको टोलीले त्यहाँ भेटिएका अन्य प्रमाणहरू पनि सङ्कलन गर्‍यो । र, उक्त आईसीटी ल्याबमा कार्यरत कर्मचारीको विवरण माग्यो । प्रहरीलाई उक्त आईसीटी ल्याबमा ट्रेनर पदमा विश्वास गुरुङ र सूचना प्रविधि सहायकमा पदमा कार्यरत राजेन्द्र तहाता रहेको विवरण प्राप्त भयो ।

कर्मचारीको विवरण पाउनासाथ प्रहरी विश्वास गुरुङको घरमा पुग्यो । त्यस क्रममा उनको कोठाबाट एसर ब्रान्डको ल्यापटप र सामसङ फोन प्रहरीले बरामद गर्‍यो । अनि सुरु भयो अवैध रूपमा क्रिप्टो माइनिङ भइरहेको विषयको उत्खनन ।

उक्त आईसीटी ल्याबमा कार्यरत गुरुङ र तहमाताको संलग्नता देखिएपछि ३० जेठमा ब्युरोबाट खटिएको टोलीले नियन्त्रणमा लिइयो । त्यही दिन सो ल्याबबाट ६४ ओटा कम्प्युटर, सर्भर र हार्डडिस्कसहित अन्य डिभाइस बरामद गरिएको थियो । त्यसपछि यता प्रतिवादीसँग बयान लिने काम अगाडि बढ्यो । र, अर्कोतर्फ बरामद गरिएका डिभाइसमा विस्तृत अनुसन्धान अगाडि बढाएको थियो ।

केन्द्रीय अनुसन्धान ब्युरोका प्रवक्ता एवं प्रहरी उपरीक्षक होवीन्द्र बोगटीका अनुसार बरामद गरिएका डिभाइसको फरेन्सिक परीक्षण भइरहेको छ । प्रारम्भिक अनुसन्धानका क्रममा भेटिएका विवरण जिल्ला सरकारी कार्यालय भक्तपुर पठाइएको छ ।

कोरियाली कर्मचारी संलग्न भएको आरोप !

प्रहरीले प्रतिवादी राजेन्द्र ताहामतासँग दुई चरणमा बयान लिएको थियो । पहिलो पटक बयान दिँदा उनले आफ्नो कुनै संलग्नता नभएको बताएका थिए । विशेषगरी सो घटनामा कोरियाली कर्मचारीको संलग्नता हुन सक्ने उनको भनाइ थियो । उक्त भवनमा आवश्यक कम्प्युटर तथा अन्य इलेक्ट्रोनिक प्रडक्टहरू कोरियन परियोजना कोइका प्रोजेक्ट अन्तर्गत जडान गरिएका हुन् ।

उनले पहिलो पटक प्रहरीलाई बयान दिंदा भने, "कम्प्युटरको परीक्षणको क्रममा देखिन आएको फायरफक्स ब्राउजर, गिटहब डटकममा सीपीयू माइनर सम्बन्धी सर्च गरेको, कम्प्युटरको स्टार्टअपमा सीपीयू माइनर सफ्टवेयर र क्रिप्टो माइनिङ एप्लिकेसनहरू कोइका प्रोजेक्टबाटै खटिएका कोरियन कर्मचारीले नै गरेको हुनुपर्छ ।"

ताहामताले पहिले आफूले ल्याबमा तालिम सकिएपछि सबै कम्प्युटर बन्द गर्ने गरेको बताए । तर, ब्युरोबाट प्रहरी खटिंदा कसरी कम्प्युटर अन भए, त्यो विषय आफूलाई थाहा नभएको उनको भनाइ थियो । त्यस समयमा उनी विदामा रहेको र ल्याबका कम्प्युटर हेर्ने जिम्मा अर्का प्रतिवादी विश्वास गुरुङको रहेको बयान दिएका थिए ।

त्यस्तै ल्याबका कम्प्युटर मर्मत गर्न रिलायन्स इन्फो टेक प्रालिसँग सीटीईभीको सम्झौता भएको थियो । सोही अन्तर्गत कर्मचारी साताको दुई दिन ल्याबमा गई मर्मत गर्ने गर्छन् । ताहामताले करिब डेढ वर्षअघि ती कर्मचारी आएर कम्प्युटर मर्मत गरिसकेपछि कमान्ड प्रोम्प्टमा क्रिप्टो माइनिङसम्बन्धी कोड रन हुने गरेको बताए । हरेक समय आफूले उक्त कोड क्यान्सिल गरी अरू काम गर्ने गरेको उनको भनाइ थियो ।

पहिलो पटक बयान दिंदा उनले आफूले क्रिप्टोकरेन्सीका लागि ब्रेभ ब्राउजरमा क्रिप्टो विज्ञापन हेर्ने गरेको बताए । तर उक्त क्रिप्टोकरेन्सी ब्रेभ बाहेक अन्यमा काम नगर्ने भएपछि प्रयोग गर्न छोडेको उनको भनाइ थियो ।

क्रिप्टो माइनिङ आफू र विश्वास गुरुङले गरेको ताहामताको स्वीकारोक्ति

प्रतिवादी ताहामताले सुरुमा भनेका सबै कुरा प्रहरीलाई बनावटी लाग्यो । त्यसपछि उनीमाथि थप बयान लिइयो । त्यसक्रममा ताहामताले अर्का आरोपित विश्वास गुरुङले सीपीयी माइनर डट ब्याट फाइल राखेको दाबी गरेका छन् । र उक्त ब्याट फाइट कम्प्युटरको स्टार्टअपमा आफैंले राखेको स्वीकारेका छन् । त्यस्तै त्यहाँ भेटिएका क्रिप्टोसँग सम्बन्धित एप पनि विश्वास गुरुङले भने अनुसार डाउनलोड गरी राखेको उनको दाबी छ ।

त्यसबाहेक क्रिप्टोको दर रेट थाहा पाउन आफैले कम्प्युटर क्रिप्टो माइनिङ ट्युटोरियल हेर्ने गरेको र वेबसाइट ब्राउज गर्ने गरेको उनको आरोप छ ।

क्रिप्टोसँग सम्बन्धित विभिन्न एप्लिकेसन प्रयोग गर्दा प्राप्त हुने क्वाइनहरूमध्ये सीपीयू माइनर डट ब्याटबाट ऱ्याप्टोरियम क्वाइन प्राप्त हुने गरेको उनले खुलाएका छन् ।

माइनिङ गरेको क्रिप्टोको वालेट स्पिड फ्रेड आफूले गुगल किप प्लेटफर्ममा राख्ने गरेको समेत बताएका छन् । यो सबै काम आफूले विश्वास गुरुङको निर्देशनमा गर्दै आएको बताएका छन् । विशेषगरी अहिले क्रिप्टो माइनिङ गर्ने र पछि नेपालमा क्रिप्टो कानुनी हुँदा उक्त रकम बाँड्ने सम्झौता भएको समेत बताएका छन । हालसम्म कुनै पनि क्रिप्टोकरेन्सी बिक्री नगरेको उनको भनाइ छ ।

के भने अर्का प्रतिवादी विश्वास गुरुङले ?

यता प्रतिवादी विश्वास गुरुङले भने यस विषयमा आफूलाई केही पनि थाहा नभएको बयान दिएका छन् । विशेषगरी ल्याबका कम्प्युटर किन अन हुन्छन् भनी प्रतिवादी ताहामतालाई सोध्दा उनले अटोमेटिक अन हुने जवाफ दिने गरेको प्रहरीलाई बताए । प्रतिवादी गुरुङले प्रयोग गर्ने ल्यापटपमा अवैध सट्टेबाजी प्लटेफर्म वनएक्स बेट समेत लगइन थियो । तर, उक्त प्लेटफर्मबारे पनि आफूलाई केही थाहा नभएको उनले बताएका छन् ।

त्यस्तै उनको ल्यापटपमा बाइनान्स र ओकेएक्स जस्ता क्रिप्टो एक्सचेञ्ज प्लेटफर्म पनि लगइन भएको देखिएको थियो । उनले ती प्लेटफर्मको बारेमा पनि आफूलाई केही थाहा नभएको बताए । उक्त ल्यापटप आईटी बिल्डिङको भिडिओ कन्फेरेन्स रुममा राखिने भएकाले कसले प्रयोग गर्‍यो आफूलाई थाहा नभएको उनको भनाइ छ ।

क्रिप्टो माइनिङबाट जम्मा भएको क्रिप्टोकरेन्सी वनएक्स बेटमा प्रयोग !

प्रतिवादी राजेन्द्र ताहामताले थप बयानमा खुलाए अनुसार तीन ओटा वालटमा ऱ्याप्टोरिम क्वाइन दुई लाख १५ हजार २५, १८८.५७ यूएसडीटी, २१४.५७ भेरस क्वाइन, मोनेरो ४.६४ र ११४२ यूएसडी देखिएको छ ।

प्रतिवादी विश्वास गुरुङले बयानको क्रममा क्रिप्टो सम्बन्धी कुनै पनि काम आफूले नगरेको बताएका थिए । यद्यपि उनले प्रयोग गर्ने ल्यापटपमा बाइनान्स, ओकेएक्स र वनएक्सबेट जस्ता प्लेटफर्म देखिएका छन् ।

त्यसैले क्रिप्टो माइनिङ गरी सङ्कलन गरिएको करेन्सी यी प्लेटफर्ममा एक्सचेञ्ज गरी रकम निकालेको वा बेटिङमा खर्च गरेको हुनसक्ने अनुमान छ ।

प्रतिवादी ताहामता र गुरुङले आर्थिक लाभका लागि सरकारी सम्पत्तिको चरम दुरुपयोग गरिएको उनीहरूविरुद्ध भक्तपुर जिल्ला अदालतमा दर्ता अभियोगपत्रमा उल्लेख छ । उनीहरूले मुलुकी अपराध संहिता २०७४ परिच्छेद २२ को मुद्रा सम्बन्धी कसुरको दफा २६२ (क) को उपदफा (१) र (२) विपरीतको कसुर गरेको पुष्टि भएको अभियोगपत्रमा उल्लेख छ ।

उनीहरूलाई सोही ऐनको दफा २६२ (क) को उपदफा (३) बमोजिम सजाय मागदाबी गरिएको छ । त्यस्तै उनीहरूले सङ्कलन गरेको क्रिप्टोकरेन्सी मुलुकी अपराध संहिता, २०७४ को दफा २६५ बमोजिम जफत गर्न समेत सुझाव दिइएको छ ।

## प्रतिष्ठानको....

छक्कबहादुर लामाका अनुसार 'हुम्लो'आदिवासी त्यहाँका पाँच समुदाय मिलेर बनेको हो । दोजामी गाउँमा बहुल बसोबास गर्ने चाङ्वा, वारथपालेका निन्वा, साठी खोलेका टुक्च्यु लुङ्वा, सात थपालेका युल्छो दुन् र लिमेलका लिम्बा आदिवासीको संयुक्त रुप हुम्लो भएको उहाँको भनाइ रहेको छ ।

'हुम्लो'का फरक-फरक समुदाय भए पनि भाषामा एक रुपता देखिएको कार्यदलका संयोजक लामाले बताउनु भयो । यस अघि जनगणनामा कतै नदेखिएको हुम्लो आदिवासीको पहिचान गर्न कार्यदलले मेहनत गरेर समुदायको परिभाषा अनुसार सो नामाकरण भएको उहाँले जानकारी गराउनु भयो ।

डा. लामाका अनुसार 'हुम्लो' आदिवासीहरुको संस्था नम्ख्युङग हुम्ला समाजले २०८१ बैशाख ११ गते प्रतिष्ठानमा सूचिकरणका लागि आवेदन दिएको बताउनु भयो ।

यस अघि डा. ओम गुरुङको संयोजकत्वमा गठित आदिवासी जनजाति परिमार्जन उच्चस्तरीय कार्यदल बन्न अगाडि हुम्ला समाजसेवाले भोटे लामा जातिका रुपमा सूचिकरण गर्न माँग गरेको थयो । डा.गुरुङ कार्यदलले 'लिमियँ', 'हिल्छोदुन', 'निम्बा', टुहुक्ल्युलुङ गरी चार समुदायलाई सूचिकरण गर्ने सिफारिस गरेको थियो ।

लामाका अनुसार 'हुम्लो' आदिवासीहरुले नम्ख्युङग हुम्ला समाज नामक संस्था गठन गरेर अगाडि बढेका छन् । उहाँले करीव ६ हजार जनसंख्या भएका हुम्लो आदिवासीहरु बौद्ध धर्मावलम्बी रहेको र प्रतिष्ठान ऐनमा भएका सबै विशेषता कायम रहेको दावी गर्नू भयो ।

कार्यदलले दिएको प्रतिबेदन अनुसार 'हुम्लो' आदिवासीहरुलाई इतिहासमा र स्थानीय कारछ्याग अभिलेखमा 'होम्लोहो' उल्लेख भएको उल्लेख छ । यो शव्द अनुसार 'होम्बो' भनेको स्थानीय वनस्पतीको नाम हो भने 'ल्हो' भनेको दक्षिण वा 'लुङ' उपत्यका हो । हुम्ला जिल्ला यही 'हुम्लो'हुँदै हुम्ला बनेको उल्लेख गरिएको छ ।

यस अघि हुम्लोहरुलाई खस क्षत्रीहरुले 'हुम्ल्या', 'जाड' र 'भोटे' भन्ने गरेका छन । खाम्पा भोटे, मुगाल, डोल्पा तथा व्यासहरुले 'हुम्लो तथा हुम्लु' भन्ने गरेका छन । तिव्वती समुदायले होम्लो रोङ्वा भन्ने गरेको पाइन्छ ।

२०७८को जन गणनामा 'हुम्लो' आदिवासी समावेश गरिएको छैन । उनीहरुको थाकथलो रहेको स्थानमा हुम्लाको सिमिकोट र नाम्खा गाउँपालिकामा बसोबास गर्ने हुम्लोहरुले तामाङ, लामा अथवा भोटे लगायतका जात राखी नागरिकता लिने गरेको पाइन्छ । तर यो सूचिकरण पछि उनीहरुको पहिचान विहिनता सकिने र जातिमा एक रुपता हुने अपेक्षा गरिएको थियो ।

कार्यदलका सदस्य डा. विष्णु सिन्जालीका अनुसार उनीहरुको साझा भाषा 'हुम्लो के' हो । यो भाषालाई 'खाम के, वा बो के' पनि भनिन्छ ।

हुम्लामा बसोबास गर्ने लिमियँ, हिल्छोदुन्, निम्बा, टुहुक्ल्युलुङ र दोजाङ समेतका पाँचै समुदायले बोल्ने भाषामा भौगोलिक भेद भए पनि एकअर्का बीच बोधगम्यता भएको बताउनु भयो । उहाँका अनुसार तिव्वती भाषा र हुम्लो भाषा बीच अत्याधिक अन्तर रहेको र उनीहरु बीच बातचित हुन नसक्ने अध्ययनबाट देखिएको बताउनु भयो ।

परम्पराको हकमा हुम्लोहरुको 'भोद लाँग' नामक पशुपालन सम्बन्धी परम्परा, ' लाफो, डावला' जस्ता देबी देवता पुज्ने परम्परा, 'युल्छा'जस्ता धेरै प्रकारका परम्पराले उनीहरु पृथक रहेको ठहर कार्यदलको छ ।

आदिवासी जनजाति उत्थान राष्टिय प्रतिष्ठान ऐन अनुसार आदिवासी जनजाति सूचिकरणका लागि मातृभाषा, परम्परागत रीतिथिति, छुट्टै साँस्कृतिक पहिचान, सामाजिक संरचना र लिखित वा अलिखित इतिहास भएको हुनु पर्दछ ।

# एमबाप्पे रियल म्याड्रिड खेलाडीका रुपमा सार्वजनिक

एजेन्सी - फ्रान्सको राष्ट्रिय फुटबल टोलीका कप्तान किलियन एमबाप्पे मंगलबार सान्टियागो बर्नाबाउमा रियल म्याड्रिडका खेलाडीको रुपमा सार्वजनिक भएका छन् ।

एमबाप्पे २०२३/२४ क्लब सिजनको अन्त्यपछि फ्री ट्रान्सफरमा पेरिस सेन्ट जर्मेन (पिएसजी) बाट रियल गएका हुन् । २५ वर्षीय फरवार्डलाई स्वागत गर्न रियलको रंगशालामा ८० हजारभन्दा बढी समर्थक उपस्थित थिए ।

पिएसजीमा रहँदा एमबाप्पेले ६ पटक फ्रेन्च लिग जितेका थिए । उनले पेरिसस्थित क्लबबाट ४ फ्रेन्च कप, २ फ्रेन्च लिग कप र ३ फ्रेन्च सुपर कप पनि जिते । एमबाप्पेले क्लबमा आफ्नो सात सिजनको अवधिमा पिएसजीका लागि ३ सय ५ खेल खेल्दै २ सय ५५ गोल गरे । उनले रियल खेलाडीको रूपमा ९ नम्बरको जर्सी लगाउनेछन् । रियलको नम्बर ९ जर्सी लगाउने अन्य फुटबलरहरूमध्ये क्रिस्टियानो रोनाल्डो (उनी पछि नम्बर ७ जर्सीमा परिवर्तन भए), रोनाल्डो नाजारियो (ब्राजिलियन रोनाल्डो), करिम बेन्जेमा थिए ।

एमबाप्पेको रियलसँग अनुबन्ध गत महिना पुष्टि भएको थियो । तर सुपरस्टार फुटबलर फ्रान्ससँग अन्तर्राष्ट्रिय प्रतिबद्धता भएकाले युरो कप पछि मात्र सार्वजनिक भएका हुन् । एम्बाप्पेले जर्मनीमा भएको युरो २०२४ मा फ्रान्सको नेतृत्व गरेका थिए ।

एमबाप्पेका लागि युरो कप भने कठिन रह्यो । प्रतियोगिताको प्रारम्भिक चरणमा उनको नाकमा चोट लागेको थियो भने यसपटक युरोमा उनले १ गोल मात्र गरे । फ्रान्स सेमिफाइनलमा स्पेनसँग पराजित भएको थियो ।

# स्पेनलाई युरो कप उपाधि

एजेन्सी - स्पेनले युरो कप २०२४ को उपाधि जितेको छ । बर्लिनमा भएको फाइनलमा इङ्ल्यान्ड माथि २-१ को जित निकाल्दै स्पेनले युरोपेली च्याम्पियनसिपको उपाधि जितेको हो ।

दोस्रो हाफको सुरुवातमै स्पेनले गोल गर्दै खेलमा सुरुवाती अग्रता लिएको थियो । स्पेनका लागि दुई युवा विंगर गोलमा संलग्न रहे । लामिन यमालको पासमा निको विलियम्सले गोल गरे ।

७३औं मिनेटमा इङ्ल्यान्डले बराबरी गोल गर्यो । गोल गर्ने खेलाडी कोल पालमर रहेका थिए । तीन मिनेट अघि मैदान प्रवेश गरेका उनले बक्स बाहिरबाट उत्कृष्ट गोल गरे ।

तर ८६औं मिनेटमा स्पेनले विजयी गोल गर्यो । मार्क कुकुरेलाको क्रसमा मिकेल ओयारजाबालले गोल गर्दै स्पेनलाई जित दिलाए ।

स्पेनको यो चौथो युरो उपाधि हो । इङ्ल्यान्ड भने लगातार दोस्रो युरो कप फाइनलमा पराजित भएको छ । इङ्ल्यान्डले युरो कप उपाधि जित्न सकेको छैन । इङ्ल्यान्डले १९६६ मा विश्वकप जिते पछिको उपाधिको खडेरी तोड्न सकेको छैन ।

# अर्जेन्टिनालाई कोपा अमेरिका उपाधि

एजेन्सी - अर्जेन्टिनाले कोपा अमेरिका २०२४ को उपाधि जितेको छ । लगातार दोस्रो पटक उपाधि जित्ने क्रममा अर्जेन्टिनाले कोलम्बियालाई अतिरिक्त समयमा १-० ले हराउँदै उपाधि जितेको हो ।

अर्जेन्टिनाका लागि लौतारो मार्टीनेजले १ सय १२ औं मिनेटमा गोल गरे । ९७औं मिनेटमा मैदान प्रवेश गरेका उनले जियोभानी लो सेल्सोको थ्रो पासमा गोल गर्दै अर्जेन्टिनालाई उपाधि दिलाएका हुन् ।

लिसान्द्रो मार्टिनेजले मैदानको मध्यभागमा गरेको उत्कृष्ट ट्याकलपछि प्राप्त मौकामा उनले गोल गरेका थिए ।

६६औं मिनेटमा कप्तान तथा स्टार खेलाडी लियोनेल मेस्सीलाई चोटका कारण गुमाएको अर्जेन्टिनाले उपाधि भने जित्न सफल रह्यो ।

सन्१९९४ पछि लामो समय कुनै उपाधि जित्न नसकेको अर्जेन्टिनाले पछिल्लो ३ वर्षमा लगातार तीन उपाधि जितेको हो । २०२१ मा कोपा अमेरिका जितेपछि अर्जेन्टिनाले २०२२ मा विश्वकप उपाधि जितेको थियो । फाइनलमा गोल गर्ने लौतारोले प्रतियोगिता अवधिभर ५ गोल गर्दै उत्कृष्ट गोलकर्ता समेत बने ।

## नया.......

प्रधानमन्त्री बन्ने पालो भने सबै भन्दा ठूलो दल नेपाली कांग्रेसको पोल्टामा गएको छ। यसरी देशमा तेस्रोबाट पहिलो स्थानमा रहेको राजनीतिक दलले सत्ता संचालन गर्ने दलहरु बीचको डिजाइनमा बर्तमान राजनीतिक घटनाक्रम घटेको विश्लेषण राजनीतिक बृतमा छ।

यस अर्थमा राजनीतिक दलहरुले भन्ने र व्यवहारमा गर्ने कार्यले दलहरुको सत्तारोहणका लागि जस्तोसुकै कार्य गर्न पनि पछि नपर्ने भाष्य आम मान्यता जस्तै भइसकेको छ। लामो राजनीतिक इतिहास भएका र पटकपटक राजनीतिक परिवर्तनकै लागि बलिदानीपूर्ण आन्दोलन गरेका राजनीतिक पार्टी या पछिल्ला समय उदाएका नयाँ पार्टी नै किन नहुन् ? जनताले हेर्ने दृष्टिकोणमा तुलनात्मक रूपमा धेरै भिन्नता पाइँदैन।

पछिल्लो समय नेपाली कांग्रेसका सभापति शेरबहादुर देउवा र नेकपा एमाले अध्यक्ष केपी शर्मा ओलीले गरेको भनिएको सात बुँदे सहमतिमा राजनीतिक स्थायित्वका लागि संविधानमा आवश्यक संशोधनसहित अध्यक्ष ओलीको नेतृत्वमा 'राष्ट्रिय सहमतिको सरकार' गठन गर्ने भनेर प्रचार गरिएको थियो। ठुला र जिम्मेवार दुई दलका नेताहरूले भनेको कुरामा सर्वसाधारण नागरिकले विश्वास नगर्ने कुरा पनि भएन। यद्यपि उनीहरूले गरेको त्यो गोप्य सहमतिमा अरू के के छन् ? न लिखत सार्वजनिक भएको छ न नेताहरूले प्रस्ट बताउनै चाहेका छन्।

'राजनीतिक स्थायित्वका लागि संविधानमा आवश्यक संशोधन गर्ने गरी ओलीको नेतृत्वमा राष्ट्रिय सहमतिको सरकार बनाउन नेकपा(एमाले) र नेपाली कांग्रेसका बिचमा समझदारी। यस प्रक्रियामा सहमत दलहरूलाई राष्ट्रिय सरकारमा समावेश गरिने,' असार १८ गते एमाले महासचिव शङ्कर पोखरेलले सामाजिक सञ्जालमा लेख्दै यस्तो प्रस्टीकरण दिएका थिए।

नेपालका राजनीतिमा देखिएको यही अस्थिरताको कारण पनि संविधानमा संशोधन आवश्यक रहेको आज जनसमुदायको बुझाई पनि रहेको छ। सार्थ राजनीतिक दलहरुमा पनि देशमा राजनीतिक स्थायीत्वका लागि जनताबाट प्रत्यक्ष निर्वाचित कार्यकारी प्रमुख हुनुपर्ने मान्यता सार्वजनिक भएको पनि हो। तर भिशी रुपमा भने राजनीतिक दलका नेताहरु यसको विषक्षमा रहेको देखिएको छ। त्यस्तै संघीयताको सवालमा प्रदेशको नामाकरणमासमेत राजनीतिक दलका नेताहरु आम जनताको पक्षमा राष्ट्रिय पहिचानको पक्षमा देखिए पनि आन्तरिक रुपमा देशमा एकल पहिचानको पक्षमा रहेको घटनाक्रमले पनि देखाएको छ। यसरी राजनीतिक स्थायित्व, राष्ट्रिय सहमतिको सरकार वा संविधान संशोधनजस्ता विषय आवश्यकताभित्रै पर्ने विषय हुन्। तर त्यसको जग कस्तो छ भन्ने कुराले पनि धेरै कुराको सङ्केत गर्छ। जबकि मुलुकका ठुलठुला भ्रष्टाचार काण्डमा दलका नेताहरू जोडिँदै जानु र त्यसै बेला भएको समझदारीमा सत्ता सहयात्री दललाई समेत थाहा नदिनुले स्वाभाविक रूपमा प्रश्न उठ्न पुगेका छन्। त्यही सहमतिलाई आधार मानेर एमाले अध्यक्ष केपी शर्मा ओलीले नेपाली कांग्रेसको सहयोग र समर्थनमा प्रधानमन्त्री पद प्राप्त गरिसकेका छन्। ओलीपछि देउवा प्रधानमन्त्री हुने नेताहरू नै बताइरहेका छन्।

ओली नेतृत्वको सरकारमा कांग्रेस, एमालेबाहेक जसपा र लोसपा पनि एक दुई थान मन्त्री लिएर सहभागी बनेका छन्। प्रतिनिधि सभाका २७५ सांसदमध्ये ओली नेतृत्वको सरकारलाई चार दलसहित सिके राउत नेतृत्वको जनमत र रञ्जिता श्रेष्ठको नाउपा समेतको सदाशयता देखिन्छ। यस अघि यी दलहरु नेकपा माओवादीसहितको गठवन्धनमा पनि सहभागी थिए। यसबाट पनि संसदमा रहेका साना दलहरु जता खोला बग्छ उतै बग्ने र सत्तामा टिकिरहने प्रबृति बनेको छ। जसको कारण पनि यी साना दलहरु प्रति जनतामा कुनै किसिमको बिश्वास छैन। साथै देशको मुलधारको राजनीतिमा यी दलहरु कहिल्यै उदाउन पनि सक्ने छैनन्। यही राजनीति बुझेको ठूला दल कांग्रेस र एमालेले जनमतलाई मधेस र नाउपालाई सुदूरमा सत्ताको आश्वासन दिएर सांसदको यो जोहो गरेको हो। सामान्यता राष्ट्रिय सहमतिको सरकार मान्न राष्ट्रिय मान्यताप्राप्त सबै दलको साथ हुनुपर्ने हुन्छ। त्यति गर्न नसके संसदीय गणितको हिसाबले दुई तिहाइ सांसदको समर्थनलाई पनि मान्न सकिने राजनीतिक वृत्तको बुझाई छ। अर्कोतर्फ नेकपा माओवादी केन्द्र, रास्वपा र नेकपा एकीकृत समाजवादी प्रतिपक्ष बेञ्चमा पुगिसकेका छन्।

त्यसैगरी, उपेन्द्र नेतृत्वको जसपा नेपालले सरकारबाहिर रहेर ओली सरकारलाई समर्थन गर्ने बताएको छ। यसै पनि संघ सरकारमा २२ वटा मन्त्रालय रहेकोमा ३ राज्यमन्त्रीबाहेक अब अरू मन्त्री थप्न मिल्ने अवस्था छैन। किनभने संविधान अनुसार २५ जना भन्दा बढी मन्त्री बनाउन मिल्दैन।

यसरी कांग्रेस एमालेले ओलीको नेतृत्वमा राष्ट्रिय सहमतिको सरकार बनाउने भनिरहेका बेला एक हिसाबले मन्त्रिपरिषद् अन्य साना दलहरुले भाग पाउने अवस्था भने देखिएको छैन। किनकी ती साना दलहरुको अवस्था दुई ठूला दलहरुको स्पष्ट बहुमतका कारण पनि सम्भव छैन। यसबाट साना दलको लागि सरकारमा जाने ढोका बन्द भैसकेको देखिन्छ। अब सरकारमा थपिने दलहरूले राज्यमन्त्रीमा मात्रै चित्त बुझाउनुपर्ने कि ठुला दलका मन्त्री हटाएर साना दललाई मैदान खाली गर्नुपर्ने हुन्छ।

तर, कांग्रेस एमालेको भागमा परेका मन्त्रीले आफ्नो भाग छाडेर अरू दलका नेतालाई मन्त्री बनाउने साहस गर्ने अवस्था पनि तत्काल देखिँदैन र त्यो विकल्पमा तत्कालै कांग्रेस-एमाले जान सक्ने सम्भावना छैन। यस्तो अवस्थामा कांग्रेस-एमालेले प्रचार गरेजस्तो संविधान संशोधन, राष्ट्रिय सहमतिको सरकारजस्ता विषय किनारामा पर्नेछ।

बरु साना दलले लगाएको आरोपलाई पुष्टि हुने गरी ठुला दल सत्तामा टिक्ने र कबोल पुरा नगरी जनतालाई ढाँट्ने पुरानो प्रवृत्तिबाहेक अरू केही उपलब्धि हुन नसक्ने विश्लेषकहरूको ठहर छ। राजनीतिक विश्लेषक प्राध्यापक कृष्ण पोखरेल कांग्रेस एमालेले भनेको राष्ट्रिय सहमतिको सरकार र संविधान संशोधन या राजनीतिक स्थायित्वको चर्चा सत्ता यात्राको अस्त्रबाहेक केही नभएको बताउँछन्।

'कांग्रेस एमालेले जे भनेर प्रचार गरे पनि उनीहरूको समझदारी भनेको सत्ता यात्रा टिकाउने अस्त्रबाहेक केही होइन', विश्लेषक पोखरेलको बुझाई छ। आलोपालो प्रधानमन्त्री हुने देउवा ओलीको योजना सफल पार्न जनताको ध्यान अन्यत्र मोड्न राष्ट्रिय सहमतिको सरकार र संविधान संशोधनको शब्दजालका रूपमा बुझ्न पर्ने पोखरेलको भनाइ छ। उनले संविधान संशोधनको चाहाना भए पनि त्यो चाहाना हुने दलहरूले यसरी गोप्य समझदारी गर्न आवश्यक नभएको बताए।

ओलीलाई मुलुकले अहिले ४५ औं प्रधानमन्त्रीको रूपमा पाएको छ। बितेको १६१ वर्षको इतिहासमा भीमसेन थापाले ३१ वर्ष प्रधानमन्त्री रहेर मुलुक चलाएको इतिहास भए पनि त्यसपछिका समयमा छिटोछिटो प्रधानमन्त्री फेरिने नेपालको 'रोग' या 'नियति' नै भइसकेको छ। २०७२ को संविधान बनेपछि मात्रै नौ वर्षमा तीनजना नेता ८ पटक पालैपालो प्रधानमन्त्रीको कुर्सीमा पुगेका छन्। पछिल्लो पटक नेपालका दुई ठुला दल नेपाली कांग्रेस र नेकपा एमालेले यही अस्थिर नियति भोग्न नपरोस् भन्ने तर्क गर्दै तत्काललाई दुई दलीय गठबन्धन गरेर ओलीको नेतृत्वमा नयाँ सरकार बनाएपनि राजनीतिक स्थायित्व र जनचाहनाअनुसारको संविधान संशोधन कठीन हुने जानकारहरु बताउँछन्।

## बाढी....

८२ घर डुबानमा परेका छन्। २ सय ५ वटा घर, ७८ वटा गोठ, ४३ वटा पुल, १ वटा विद्यालय र २ वटा सरकारी कार्यालयमा क्षति पुगेको छ। ५ सय ३९ वटा पशु चौपायको मृत्यु भएको छ। उक्त अवधिमा विपद्का घटनाबाट ३ हजार ६ सय ३० घर परिवार विस्थापित भएका छन्।

साथै बाढी पहिरोको जोखिममा रहेका विभिन्न जिल्लाका विभिन्न घर परिवारलाई सुरक्षित स्थानमा राख्ने, पहिरोमा पुरिएका धनमाल निकालेर सुरक्षा गर्ने काम समेत विभिन्न निकाय र स्थानीयबासीको समन्वय र सहयोगमा गर्नुका साथै विभिन्न स्थानमा भएको बाटो अवरोध हटाउने कार्य समेत प्रहरीले गरिरहेको छ।

## नेमकिपा......

दावी गरे। आफू मन्त्री र सांसद हुँदा बिकासको बाढी नै ल्याएको भन्दै उनले सांसद थापाले केही गर्न नसकेका गुनासो गरे।" हामी हुँदा करौडौंको दर्जनौं योजनासहितका बजेट भक्तपुरमा आउथ्यो, अहिले सीमित बजेट त्यो पनि लाखमा मात्र आएको छ।" उनले बताए।

नेमकिपा र कांग्रेसका सांसदले विकास निर्माण आफूहरुको काम होइन भन्दा भक्तपुरमा विकासको गति कम भएको उनको भनाइ छ। आफूले हनुमन्ते करिडोर बनाउन २ अर्व बजेट बिनियोजन गरेको तर नेमकिपा र काँग्रेसका कारण त्यो हुन नसकेको उनले आरोप लगाए। नेता बस्नेतले हनुमन्तेले डुबाएको समाचार सम्प्रेशन गर्दा नेमकिपाका कारण भक्तपुर नगर क्षेत्र र नेपाली कांग्रेसको कारण मध्यपुर थिमीको सागबारी क्षेत्र मात्र डुबानमा परेका र अन्य क्षेत्रमा डुबान नभएको जानकारी गराउनपर्ने सुझाव समेत दिए।

राजनीतिमा प्रतिष्पर्धा र विकासमा एकता हुनुपर्ने आफूले नारा नै दिएको तर, सो अनुरुप आफूलाई भने अन्य राजनीतिक दल र तीनका नेताले साथ् नदिएका उनले दुखेसो पोखेका छन्। आफू र आफ्नो दलले भने विकासमा अघि बढ्न खोज्ने सबैलाई साथ् र सहयोग गर्ने बताएका छन्।

आफूले बालेन र रवि लामिछाने प्रबृत्तिको शुरुदेखि नै बिरोध गरेको बताउदै नेता बस्नेतले यतिबेला आफ्नो कुरा सही पुष्टि भएको प्रष्ट पारे। आफूलाई धेरैले नेमकिपा, बालेन र रविहरुको बिरोध नगर्न सुझाएका भन्दै उनले आफू भीडको पछि कुद्ने मानिस नभएको बताए। सत्य बोलेर जनमत घट्छ र चुनावमा पराजय भोग्न पर्छ भने पटकपटक हार व्यहोर्न तयार रहेको तर, सत्य र न्यायको कुरा गर्न नछोड्ने उनले बताएका छन्।" भीडको पछि लाग्ने भए उतीबेलै नेकपा एमाले नभई काँग्रेस वा नेमकिपामा बसिन्थ्यो, कम्युनिष्ट पार्टी रोजेपछि सहि आलोचना गर्न सक्नुपर्छ।" उनले भने।

भुटानी शरणार्थी र गिरिबन्धु टि प्रकरण ढाकछोप गर्न कांग्रेस एमाले मिलेर सरकार गठन गरेको आरोपको खण्डन गर्दै नेता बस्नेतले यो आधारहीन आरोप भएको बताए। पूर्व उपप्रधानमन्त्री समेत रहेका सांसद टोपबहादुर रायमाझी, पूर्वगृहमन्त्री बालकृष्ण खाँड पक्राउ पर्दा नढलेको सरकार बेचन झा पक्राउ पर्दा ढल्यो भन्नु नै बेकारको कुरा भएको उनको भनाइ छ।

उनले राजनीतिक स्थिरताका लागि एमाले कांग्रेसको सरकार बनेको बताउँदै दुई दलबीचको सहमती उचित समयमा सार्वजनिक हुने बताएका छन्। "बच्चा जन्मने बित्तिकै नाम राख्ने काम नभए जस्तै सहमती पनि समय आएपछि आफैं बाहिर आउँछ।" उनले भने।

नेता बस्नेतले माओवादी केन्द्रका अध्यक्ष प्रचण्डको आफ्नै राष्ट्रिय अन्तराष्ट्रिय व्यक्तित्व रहेकाले उनले सरकार गुम्दैमा हतोत्सायी हुनु नहुने बताए। माओवादी केन्द्रलाई पनि सरकारमा सामेल गरेर राष्ट्रिय सहमतीको सरकार बनाउन प्रयत्न हुने उनले बिश्वास व्यक्त गरेका छन्। त्यसो हुन नसकेमा प्रचण्ड जस्तो प्रभावशाली नेताले प्रमुख प्रतिपक्षको ससक्त भूमिका निभाएर सरकारलाई रचनात्मक सहयोग र खबरदारी गर्न सके पनि देशलाई अघि बढ्न मद्दतै मिल्ने उनको बुझाइ रहेको बताएका छन्।

नेपाल प्रेस सोसाइटीका अध्यक्ष उपेन्द्र केसीको अध्यक्षतामा सम्पन्न साक्षात्कार कार्यक्रमको संचालन उपाध्यक्ष दीपेन्द्रराज खत्रीले गरेका थिए। सो अवसरमा २ दर्जन पत्रकारको सक्रिय सहभागिता रहेको सोसाइटीका महासचिव केशव लुइँटेलले जानकारी गराएका छन्।

## संयुक्त......

उनले आदिवासी जनजातिहरूको लामो सङ्घर्षपछि प्राप्त भएको नेपालको संविधानले आदिवासी जनजातिको अधिकारको संरक्षण र प्रबर्द्धधनका लागि आदिवासी जनजाति आयोग गठन भएको र आयोगको संविधान, अन्तर्राष्ट्रिय सन्धि, महासन्धि र घोषणापत्रद्वारा प्रचलित आदिवासी जनजातिको अधिकारको कार्यान्वयन स्थितिको अनुगमन गर्ने र तिनको उचित कार्यान्वयन सुनिश्चित गर्न तीनै तहका सरकारहरूलाई दबाब दिने कार्यदेश भएको स्मरण गराएको छ।

आदिवासी जनजातिको अधिकारको कार्यान्वयनका लागि राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा आवश्यक नीति, कानून र नियमावली तर्जुमा गर्न सरकारलाई सिफारिस गर्ने, र आदिवासी जनजातिको सर्वाङ्गीण विकासका लागि कार्यक्रम र कार्ययोजनाको तर्जुमा र त्यसलाई समावेश गर्न सरकारलाई सल्लाह दिने काम रहेको धारणा राखेको जनाएको छ।

## युएनड्रीप....

भएको थियो।

सो घोषणापत्र कार्यन्वयनको पक्षमा भने विश्वका सबै मुलुकले तदारुखता देखाएको र केही मुलुकमा घोषणापत्र कार्यन्वयनका लागि बेग्लै कानुन बनेको तथा अन्य घरेलु कानूनहरु पनि युएनड्रीपसंग बाझिएमा अनुकुलन गर्ने अभ्यास देखिएको अध्ययन प्रतिबेदनमा जनाइएको छ।

विश्व समाजले आदिवासीको पहिचान, फरक हुन पाउने अधिकारको सम्मान गर्दै मानव जातिको साझा सम्पदाका रुपमा रहेको संस्कृति र सभ्यताको विविधतालाई जोड दिइरहेको प्रतिबेदनको सार रहेको छ।

धेरै मुलुकले भाषिक विविधता, जातीय पहिचान सहितको साँस्कृतिक विविधता, र प्रथाजन्य परम्परागत स्वशासनलाई मान्यता दिदै प्राकृतिक स्रोत र साधनमा आदिवासीको पहुँचलाई प्रोत्साहन गरेका छन्।

संसारको राम्रो अभ्यासमा मेक्सिकोको अभ्यासलाई लिन सकिने प्रतिबेदनमा उल्लेख छ। त्यहाँको स्थानीय तहको कानूनले बहुजातीय र बहुभाषिक आदिवासीको पहिचान सहितको अधिकारलाई सुनिश्चित गर्दे व्यक्तिगत र सामुहिक अधिकारलाई पेत्साहित गरेको छ।

घोषणापत्रको मतदानमा विपक्षमा रहेको क्यानडाले उपनिवेशबादको वकालत गर्ने सबै प्रकारका कानुनहरुलाई निषेध गरेको छ। त्यहाँको अदालतको व्याख्या पछि क्यानडाले यस्तो कदम चालेको हो।

अष्ट्रेलियाले पनि आदिवासीलाई मान्यता दिने गरी सन् २०२३मा जनमत संग्रहको घोषणा गरेको थियो।

जनमत संग्रहले अस्वीकार गरेको छ। सो प्रयास पछि आदिवासी मुद्धामा सल्लाह दिने गरी संसदमा बनेको सल्लाहकार समिति पनि खारेज भएको छ। तर अव आदिवासी विरुद्ध ऐतिहासिक रुपमा भएका विभेद विरुद्ध सत्य निरुपण आयोगले काम थालेको छ।

भारतमा भने आदिवासी जनजातिको अधिकार सम्बन्धी सयुक्त राष्टसंघीय घोषणापत्रलाई आशिक रुपमा कार्यन्वयन गरेको छ। भरातमा पन्चायती राजको व्यबस्था अन्तर्गत स्वशासन कार्यन्वयन गर्ने अभ्यास प्रारम्भ गरिएको छ।

संविधानमा नै अनुसूचित जातिका लागि वन अधिकार दिने उल्लेख भए पनि कार्यन्वयन पक्ष फितलो रहेको छ। भारत स्वतन्त्र हुन अघि देखि नै आदिवासीका भूमिका वन स्रोत केन्द्रीयकरण गरिएकोमा त्यहाँका आदिवासीहरु आन्दोलनरत छन्।

आदिवासीको अधिकारमा फ्रान्सको कानुनी व्यबस्थाहरु अनुदार रहे पनि आनुवाँशिक सेत सम्बन्धी कानूनले आदिवासीको अधिकार समेटेको छ। मुलतः पकृतिक स्रोतबाट प्राप्त लाभको वाँडफाट गरिँदा आदिवासीलाई विशेष अगधिकार दिइएको छ।

इन्डिोनेशियामा घुमन्ते सामुन्दी आदिवासीका लागि विशेष स्वायत्त क्षेत्रको व्यबस्था र भूमि, भूक्षेत्रको अधिकार प्राप्त हुने गरी कानून बनाइएको छ।

आदिवासीको अधिकारसंग सम्बन्धीत स्वतन्त्र पूर्व सुसूचित सहमति (एफपीक)को व्यबस्था लागू भएको हुँदा यहाँका आदिवासीहरु अधिकारसम्पन्न मानिन्छन्।

कङगोमा आदिवासीको नागरिक तथा सामाजिक, साँस्कृतिक अधिकारको ग्यारेन्टी गरिएको छ। जनजिविकाका लागि राज्यबाट विशेष व्यबस्था तथा सामाजिक सुरक्षामा पहुँच दिइएको छ।

नेपालको असल अभ्यासको चर्चा गर्दै प्रतिबेदनमा सर्वोच्च अदालतबाट बराम आदिवासीको स्वायत्त र विशेष क्षेत्रको कानूनी व्यबस्था गर्न दिइएको आदेशलाई लिइएको छ।

त्यसो त नेपालको संविधानमा भाषिक अधिकार, आदिवासी जनजाति आयोग र आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान मार्फत युएनड्रीपको कार्यन्वयन गर्ने प्रयास भएको छ। नेपालले आइएलो महासन्धी नम्बर १६९ पनि अनुमोदन गरेको छ।

वर्ष १८ अङ्क ०१ २०८१ साउन ०२ गते बुधबार
17 July 2024 Wednesday
इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES



# चलचित्र गोर्खा वारियर अब कोरियन भाषामा




काठमाडौं । गत ११ फागुनबाट नेपालमा भव्य प्रदर्शन भएको अन्तराष्ट्रिय ऐतिहासिक नेपाली चलचित्र 'गोर्खा वारियर' अब कोरियामा पनि रिलिज हुने भएको छ । यो चलचित्रलाई यतिबेला कोरियन भाषामा तयार गरिएको छ ।

निर्देशक मिलन चाम्सको ऐतिहासिक युद्ध जनराको यो चलचित्रले नेपालमा राम्रो व्यापार गरेको थियो । नेपाली भाषामा नेपालमा रिलिज पछि अन्य विभिन्न भाषामा विदेशमा रिलिज गर्न लागिएको हो । यसै क्रममा यो चलचित्रलाई कोरियाको लागि कोरियन कम्पनी मुभमेन्ट पिक्चर कर्पले प्रदर्शन जिम्मा लिएको हो ।

कोरियन भाषामा प्रदर्शनबारे निर्देशक चाम्सले भने,'यो चलचित्रलाई कोरियाको लागि ७ वर्षको प्रदर्शन तथा वितरण अधिकार कोरियन कम्पनी मुभमेन्ट पिक्चर कर्पले किनेको थियो । गोर्खा वारियरलाई पूर्ण रूपमा कोरियन भाषामै स्वराँकन सहित तयार गरेर यसको रिलिजको लागि सो कम्पनीले हिजो कोरियन भाषामै फस्ट लुक्स पोष्टर पनि बनाएर सार्वजनिक गरेको छ ।'

अब यसलाई कोरियाका सिनेमा हलमा रिलिज गरिने पनि निर्देशक चाम्सले जानकारी गराए । कोरियन भाषाको गोर्खा वारियरलाई कोरियाको सिनेमा हलपछि त्यहाँको टेलिभिजन च्यानलहरूमा पनि रिलिज गरिने छ । सम्भवत यसरी नेपाली चलचित्र पहिलो पटक कोरियन भाषामा स्वराँकन गरेर तयार गरिएको गोर्खा वारियर भएको पनि निर्देशक चाम्सले जानकारी गराए ।

यो चलचित्र यस अघि नेपाली र अंग्रेजीमा निर्माण भइसकेको छ । यो चलचित्रको पहिलो अन्तराष्ट्रिय रेड कार्पेट प्रिमियर गत भदौमा लण्डनस्थित विश्वकै प्रतिष्ठित लेस्टर स्क्वायर स्थित 'आइम्याक्स सिनेवर्ल्ड'मा गरिएको थियो । उक्त हलमा प्रिमियर हुने 'गोर्खा वारियर' पहिलो नेपाली फिल्म हो ।

यो चलचित्रको कोरियाको लागि कोरियन र हिन्दी बाहेक अन्य विश्व बजारका लागि अमेरिकन कम्पनीले किनी सकेका कारण चलचित्र गोर्खा वारियर अबको ७ वर्षसम्म युट्युवमा रिलिज नहुने पनि यसका निर्देशक चाम्सले जानकारी गराएका छन् । यो चलचित्रको हिन्दी सँस्करण भने ओटिटी प्लेटफर्मबाट रिलिज गरिने पनि निर्देशक चाम्सले जानकारी गराए ।

सन् १९४९ मा मलाया जङ्गलमा बेलायती सेनामा आबद्ध गोर्खा सैनिकले लडेको लडाइँको कथा प्रस्तुत गरिएको यो चलचित्रमा यो चलचित्रमा रितेश चाम्स, रेविका गुरूङ, विजय लामा, रियर राई, शिशिर बाङ्देल, कविता आले, विरूप घले, सारा राई, सुरज तमु, त्रिचु राई, दिग्गज खत्री, सिद्धार्थ सिंह, सरोज खालिङलगायतको मुख्य भूमिका रहेको छ ।

यो चलचित्रको गीत शैलेन्द्र खनाल 'शरद'ले लेखेका हुन भने सो गीतमा एलिस कार्कीको संगीत, राजेशपायल राईको गायन रहेको छ । फिल्मलाई राजेन्द्र मोक्तानको रंग संयोजन गरेका छन् । यो चलचित्रमा हिमाल केसीको द्वन्द्व निर्देशन, मिलन श्रेष्ठको सम्पादन, सुदीप बरालको डीओपी छ ।

गोर्खा वारियरको निर्मातामा सुमन राई, सुस्मिता वाइवा छन् । यसको कार्यकारी निर्मातामा प्रशान्त थापा, राजेन्द्र घिमिरे एवं सहनिर्मातामा सुरेश राई रहेका छन् । यो चलचित्र लन्डन सिनेआई प्रोडक्सनको प्रस्तुति र चाम्स इन्टरटेनमेन्टको सहकार्यमा निर्माण भएको हो ।

# "गबलें गबलें र "हारती मां" म्यूजिक भिडियो श्रावण ४ गते कीर्तिपुर सिनेप्लेक्सबाट रिलिज हुने







काठमाडौं । कीर्तिपुरका संगीतकर्मी नरेनमान महर्जनको दुईटा म्यूजिक भिडियो साउन ४ गते कीर्तिपुरको पांगास्थित कीर्तिपुर सिनेप्लेक्स हलमा सार्वजनिक हुने भएको छ ।

भक्ति रसद्वारा सजिएको 'हारती मां' शीर्षकको भक्ति भजन एवं करूण रसले सिंगारिएको 'गबलें गबलें' बोलको नेपालभाषाको गजल गीतको म्यूजिक सार्वजनिक हुने जानकारी संगीतकर्मी महर्जनले दिएको छ ।

ने.सं. ११४४ दिल्लाथ्व त्रयोदसी (साउन ४ गते) शुक्रबार दिउँसो ३ बजे कीर्तिपुर सिनेप्लेक्स हलबाट सार्वजनिक हुने उक्त दुईटा गीतको म्यूजिक भिडियो सार्वजनिक कार्यक्रमको आयोजकको रूपमा एन.एम. म्यूजिक रहेको छ भने यू ट्युब च्यानलमा पनि एन.एम. म्यूजिकबाट नै सार्वजनिक भएका भिडियोहरू अपलोड हुने जानकारी दिए । आयोजक संस्था एन. एम. म्यूजिकले जानकारी दिए अनुसार श्रावण ४ गते शुक्रबार हुने म्यूजिक भिडियो सार्वजनिकीकरण कार्यक्रममा स्वयं महर्जनको सभापतित्वमा कार्यक्रम संचालन हुनेछ ।

यस्तै, प्रमुख अतिथिको रूपमा नेवाः देय् दबूको केन्द्रीय अध्यक्ष पवित्र बज्राचार्यको उपस्थिति रहनेछ भने विशेष अतिथिको रूपमा बरिष्ठ समालोचक प्रकाश साय्मीको उपस्थिति तथा कार्यक्रममा कीर्तिपुरका समाजसेवी श्रीराम महर्जन अतिथिको रूपमा उपस्थिति रहने महर्जनले जानकारी दिए ।

सार्वजनिक हुने नेपालभाषाको गजल 'गबलें गबलें'का रचना कृष्णदास जोशीले गरेको हो भने संगीत तथा स्वर नरेनमान महर्जनको रहेको छ । यस्तै नेपालभाषाकै भक्ति संगीत भजन 'हारती मां'का रचना एवं संगीत नरेनमानको रहेको छ भने उक्त गीतमा स्वयं महर्जन लगायत शुद्धलक्ष्मी श्रेष्ठ, भावना पालिखे, जयलक्ष्मी सिद्धि बज्राचार्य र गौतम मानन्धरको स्वर रहेको छ । महर्जनद्वारा संगीत एवं स्वरबद्ध तथा कृष्णदास जोशी रचित नेपालभाषाको गजल "गबलें गबलें"को म्यूजिक भिडियो गुणस्तरीय म्यूजिक भिडियो निर्माणमा माहिर मगन इन्टरटेन्टमेन्ट कीर्तिपुरका निर्देशक रजिन महर्जनको निर्देशनमा तयार भएको म्यूजिक भिडियो हो ।

यस म्यूजिक भिडियोमा नेपालभाषा कला क्षेत्रका चर्चित कलाकारहरू लक्ष्मीकुमार महर्जन उदास, अर्णेश्वरी शिल्पकार, रोजीना सुवाल, सुरेन्द्र महर्जन तापाख्यःमि लगायत अन्य कलाकारहरूले अभिनय गरेका छन् ।

यस्तै, नेपालभाषाकै भक्ति संगीत "हारती मां" म्यूजिक भिडियोमा पनि स्वयं गायक गायिका लगायत अन्य कलाकारहरूले अभिनय गरेका छन् भने निर्देशन लक्ष्मीकुमार महर्जनले गरेको छ ।

कीर्तिपुर खासीबजार बाहिरी गाउँ निवासी महर्जन एक शास्त्रीय संगीतका विद्यार्थी पनि हुन् भने एक कवि पनि हुन् ।

उनद्वारा रचिएको कविता संग्रह बजारमा आइसकेको छ भने हालै मात्र केही समय अगाडि उनले जनकवि दुर्गालाल श्रेष्ठको "घाः जुया जक ख्वइगु खः भ्वी" बोलको जनजागरण गीत विभिन्न गायक गायिकाहरूको स्वर समाहित गरी रि-रिकर्डिङका साथै म्यूजिक भिडियो रिलिज गरिसकेका छन् ।



















प्रकाशक / कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web Portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

# THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ०२ ने.सं. ११४४ साउन ०९ गते बुधबार, २०८१ 24 July 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## प्रदेश सरकारमा भक्तपुरका सांसदको सहभगिताले निरन्तरता पाउँदै




भक्तपुर । नयाँ बन्न लागेको बागमती प्रदेश सरकारमा भक्तपुरबाट प्रतिनिधित्व गर्ने सांसदको सहभागिताले निरन्तरता पाउने भएको छ । क्षेत्र-२ (क) सूर्यविनायक क्षेत्रबाट निर्वाचित प्रदेश सभा सदस्य किरण थापामगर र क्षेत्र-१ (क) चाँगुनारायण क्षेत्रबाट निर्वाचित प्रदेश सभा सदस्य सुरेश श्रेष्ठ बागमती प्रदेश सरकारमा मन्त्री बन्ने भएका छन् । सत्तारुढ गठबन्धनमा रहेको नेकपा (एमाले)का तर्फबाट थापामगर र नेपाली कांग्रेसका तर्फबाट श्रेष्ठ मन्त्री बन्ने भएका हुन् । यस अघि क्षेत्र २ (ख) मध्यपुर थिमि क्षेत्रबाट एकीकृत समाजवादीका तर्फबाट डा. राजेन्द्रमान श्रेष्ठ मन्त्री बनेका थिए ।

केन्द्रमा समिकरण बदलिएसँगै प्रदेशसभामा नेपाली कांग्रेस संसदीय दलका नेता बहादुरसिंह लामाले मुख्यमन्त्रीमा सोमबार नै दावी पेश गर्ने योजना भए पनि मन्त्रालयको भागबण्डा र नेकपा एमाले भित्रको आन्तरिक समस्याका कारण कार्यक्रम स्थगित भएको थियो । नयाँ सहमति अनुसार बागमती प्रदेशमा कांग्रेसले मुख्यमन्त्रीसहित ७ र एमालेले ६ वटा मन्त्रालय पाउने भएका छन् । नेकपा एमालेबाट थापामगरकै नेतृत्वमा सरकारमा जाने उच्च सम्भावना रहेको स्रोतले जनाएको छ । यदि, नेतृत्व पाए भने थापामगर आर्थिक मामिला मन्त्री बन्नेछन् । त्यो पनि कांग्रेसले राखेमा भौतिक पूर्वाधार मन्त्रालय उनले पाउने छन् ।

त्यसो हुन नसके उनलाई रोजेको मन्त्रालय दिने तयारी रहेको छ । थापामगरले नेतृत्व गर्न नपाए स्वास्थ्य, खानेपानी वा, यातायात मन्त्रीमा चित्त बुझाउन बाध्य हुनुपर्ने स्रोतले बताएको छ । एमालेले भक्तपुरका किरण थापा मगर, ललितपुरका प्रेमभक्त महर्जन, काठमाडौंका प्रकाश श्रेष्ठ, चितवनका अमन मास्के र सिन्धुलीकी सुकमाया तामाङलाई मन्त्री बनाउने बताइएको छ । पार्टी भित्र थापामगर अध्यक्ष केपी ओलीका बिश्वास पात्रको चिनिन्छन् ।

सत्तारुढ गठबन्धनमा रहेका भक्तपुरका २ सांसद मध्ये एमालेका थापामगरको मन्त्री पद सुनिश्चित रहेपनि कांग्रेसका श्रेष्ठलाई भने समाचार तयार

बाँकी पेज ७ मा

## मध्यपुर थिमिमा विशेष पोलियो खोप अभियान संचालन




भक्तपुर । विशेष पोलियो खोप अभियान अन्तर्गत मध्यपुर थिमि नगरपालिका भित्रका ५ वर्ष मुनिका सम्पूर्ण बालबालिकालाई यही साउन आजबाट १२ गतेसम्म पोलियो थोपा खुवाउने भएको छ । नगरपालिकाको स्वास्थ्य शाखाले सोमवार आयोजना गरेको पालिका स्तरीय खोप समन्वय समितिको बैठक एवम् अभिमुखीकरण कार्यक्रममा सो जानकारी दिएको हो । टुकुचा र बागमतीको दोभान नजिकको ढलको पानी परीक्षण गर्दा पोलियोको भाइरस पाइएपछि उपत्यकाका तीन जिल्लामा रहेका पाँच वर्षमुनिका सम्पूर्ण बालबालिकालाई पोलियो खोप दिने विशेष अभियान अन्तर्गत मध्यपुर थिमिका बालबालिकाहरुलाई पनि पोलियोको थोपा खुवाउन लागेको हो ।

अभियान अन्तर्गत मध्यपुर थिमिका ३१ हजार ९६६ घरधुरी, नगरभित्रका शिशु स्याहार केन्द्र, प्रि स्कुल, मण्टेश्वरी र

बाँकी पेज ७ मा

## बागमतीका निवर्तमान मुख्यमन्त्री जम्कट्टेलको उपलब्धी सार्वजनिक



भक्तपुर । बागमती प्रदेशका निवर्तमान मुख्यमन्त्री शालिकराम जम्कट्टेलले आफ्नो १८ महिने सरकारको मूख्य उपलब्धी आइतवार सार्वजनिक गरेको छ । प्रदेश सभामा अल्पमतमा परेपछि आइतवार नै प्रदेश सभालाई सम्बोधन गर्दै जम्कट्टेलले आफ्ना मन्त्रीमण्डलका सदस्यहरुलाई साथै राखी प्रमुख कार्यहरुको विवरण सार्वजनिक गरेको हो ।

जम्कट्टेलले सार्वजनिक गरेको मुख्य उपलब्धीमा पुँजीगत खर्च प्रदेश गठन भएयताकै सबैभन्दा उच्च ७९.४५% भएको दावी गरिएको छ । यस्तै २ सडकतर्फ ५९६ किलोमीटर कालोपत्रे भएको, ६१ वटा सडक पुल, १६ वटा झुलुङगे पुल, २२६ सामुदायिक भवन र २१ वटा पार्क निर्माण भएको जनाएको छ ।

सिंचाइतर्फ १ हजार ५ सय २१ वटा आयोजना सम्पन्न भएको, ३७ हजार ९ सय ४९ वटा थप खानेपानीका धारा जडान भएको, ३ सय ९ विद्यालयमा घेराबार, १

बाँकी पेज ७ मा

## कोरा भक्तपुरद्वारा विदेशी सहयोग अस्वीकार




भक्तपुर । ढुंगालाई माटोको भर, माटोलाई ढुंगा भने जस्तै कुनै पनि काम सफल पार्नका लागि सहयोगीको भूमिका उतिकै रहन्छ । भक्तपुरमा प्रत्येक वर्ष हुँदै आएको कोरा भक्तपुर अर्थात् साइकल यात्रा कार्यक्रम सकिएको छ । कार्यक्रमका लागि देशका अन्य जिल्लाहरुमा जस्तै भक्तपुरमा पनि यूएसआइडी नामक एनजीओ अर्थात् गैर सरकारी संस्थाले सहयोग गर्ने कुरा भयो । एनजीओले साइकल यात्रीका लागि आफ्नो लोगोसहितको एउट । एउटा

बाँकी पेज ७ मा

## भक्तपुरलाई शैक्षिक हव बनाउन सरोकारवाला एकमत



भक्तपुर । भक्तपुरलाई शैक्षिक हव बनाउन सरोकारवाला सवैजना एकमत देखिएका छन् । नेपाल प्रेस सोसाइटी सूर्यविनायक भक्तपुरले भक्तपुरलाई शैक्षिक हव बनाउन सरोकारवालाहरुसँग आइतबार गरेको छलफलमा सवैजना एकमत देखिएका हुन् । शिक्षासँग सरोकार राख्ने जिल्लाका विभिन्न शैक्षिक संगठनहरु हिसान, प्याव्सन, एन प्याब्सन, इसानलगायतका संगठनका अध्यक्षहरु तथा नगरपालिकाका शिक्षा शाखाका प्रमुखहरुसँग यसबारे छलफल गरेको थियो ।

भक्तपुरलाई शैक्षिक हव बनाउन आआफूले खेल्नसक्ने

बाँकी पेज ७ मा

## मातृशक्तिले गरे विष्णुसहस्रनामको ऐतिहासिक पाठ

काठमाडौँ । एक जना बालिकाको संस्कृत शिक्षाको प्रश्नले एउटा अभियानको थालनी गरेको छ । त्यही अभियान अन्तर्गत सञ्चालन भएको घर घरमा गुरुकुल शिक्षाबाट घरमा नै बसेर संस्कृत अध्ययन गरेका १०८ मातृशक्तिले शनिबार १०८ आवृत्ति विष्णुसहस्रनाम स्तोत्र एकै स्वर र लयमा पाठ गरे ।

त्रिशक्ति एकादशी संस्कृति समाजले पशुपतिनाथ परिसरमा रहेको श्रीशङ्कराचार्य मठमा आयोजित कार्यक्रममा १०८ जनाले वाचन गर्ने कार्यक्रम रहेको भए पनि १२३ जनाले पाठ गरेको जनाइएको छ । आयोजकका अनुसार नेपालमा यसरी यतिको सङ्ख्यामा महिलाबाट वाचन भएको यो पहिलो पटक हो ।

घरघरमा गुरुकुलका संस्थापक आचार्य कपिलदेव सुवेदीका अनुसार २०७६ सालमा कोरानाकालमा पाँच वर्षीया बालिका सान्भी सुमन प्रसाईले संस्कृत शिक्षा कहाँ लिन पाइन्छ ? भनी गरेको प्रश्नका आधारमा घरमा नै संस्कृत सिकाउने अभियान थालिएको हो । त्यस अभियान अन्तर्गत महिलाले घरमा नै बसेर अनलाइनबाटै संस्कार शिक्षा, नित्यकर्म, दुर्गा शप्तसती, श्रीमद्भागवत गीतालगायतका संस्कृतका स्तोत्रको अध्ययन तथा कथावाचनसमेत गरिरहेका छन् ।

हालसम्म २५ वटा कक्षाबाट पाँच सयभन्दा बढी महिलाले त्यस्तो ज्ञान र वाचन सिकेका छन् । हाल समाजका काठमाडौँ, मकवानपुर र चितवनमा शाखा रहेका छन् भने ललितपुर र भक्तपुरमा शाखा गठनको तयारी भइरहेको छ । संस्कार शिक्षा नेपालबाट मात्र नभई अमेरिकाबाट पनि सञ्चालनमा रहेको आचार्य कपिलदेवले जनाए ।

श्री १००८ डा. रामानन्द गिरीको परिनिर्वाणको सातौं वार्षिक समारोहको अवसर पारेर आयोजित समारोहमा संस्कृत शिक्षाका साधकलाई अभिनन्दन पनि गरिएको थियो । श्री १००८ स्वामी रमणानन्द गिरी र घर घरमा गुरुकुल अभियानका संयोजक आचार्य कपिलदेवले प्रा. शिवगोपाल रिसाल, प्रा. भवानीप्रसाद खतिवडा, समाजसेवी रामप्रसाद सुवेदी, मधुसूदन सुवेदी, शान्ति सुवेदी र अभियानको बीजारोपण गर्ने सान्भी सुमन प्रसाईलाई अभिनन्दन गर्नुभयो ।

बाँकी पेज ७ मा

## सय बर्ष पछिको भक्तपुर : सय बर्ष पछिको काठमाडौ ?

मीरा अमात्य राजभण्डारी

न्युरोडको फूट्पाथ सांघुरो भएकोले यौन हिँसा भयो रे । गुण्डाहरु पछि लाग्ने र ठाउँकुठाउँ ड्यास दिने गर्थे रे । मैले भने ड्यास दिने यौन हिंसा गर्नेहरुलाई न्युरोड पुग्नु पर्दैन एका घरका काका, भाडावाल, काम गर्ने, बस चढ्दा, अझ स्कूलका मास्टर साहेब, जता नि छन, बरु बालेन मेयरले खुलस्त भनी दिनुपर्‍यो न्युरोड् अब पाटन भक्तपुर जस्तै तेली इँटा छापेको पुरानो शहरका रुपमा परीवर्तित गरिने छ त भनेर । झन खासा नि । भएभरका दोहोरो नागरिकता लिएका, भारत र नेपाल, दुबइ ,सिङापुरमा घर भएका, ब्यापार ब्यबशायी भएका, मालिकहरुका बजार सकिने भयो । न्युरोड गोल्ड रोड होइन, पुरानै गुप्ता स्वीत्स, कृष्ण गुँद्पाक भन्डार, रन्जना सिनेमा हल, सँकटा हल वाइ पसल, बासंबारी जुता पसल, अशनतिर ज्यापु दाइचाहरुको भिडभाड । साथमा साँढे जुधाइको "फ्री" मा मनोरन्जन, हरिया प्याज, छ्यापी, आलु, मुला, गाजल्चा, प्वाटे, पाच्छै, छ्वा:, इकँ -बकँचा, बकुला, कसी:, बसी: पाइने पुरानो बजारमा परिणत हुनेछ - अनी तुकुचा पारी बस्ती सरेर गएका आफ्ना पुराना थातथलो बेचेर, भाडा लाएर बसेका कालो नेवा: खस नेपाली मा बोलिने ठेट शब्द अर्थात वास्तविक नेवा: हरु येंदे फेरी फर्केर आउने छन । जतातते नेवा: नै नेवा:, मर्स्या, माडे, पर्वते, सबै कुलेलम ठोक्ने छन् ।



किनकि उनीहरुका ब्यापार जो हुँदैन नि बिष्णुमतीमा फेरी राङा काटिनेछन । बागम्ती सफा हुन थाल्छ । किनकि अधिकांश ब्यापार त काठमाडौं बाहिरकाका छन नि । अब ब्यापार नै नभएसी जान्छन हेटौंडा- मकवानपुर, कैलेकाही योसीँ जन्माद्योका जात्रा आदी इत्यादीमा पर्यटकका सडै आउनेछन । जात्राको आनन्द

बाँकी पेज २ मा

### सय वर्ष...

लिन, हाकु थ्वँः खान । जतातत‌ै हराभरा स्वच्छ बातावरन, खानेकुरा सस्तो न सस्तो, अझ राङाको मोल घट्छ । मोमोचाः त पाँचपैसा गोटा रन्जना हलको परिसरमा पाइन्थ्यो नि । अब रन्जना कम्प्लेक्स के काम? भत्काइन्छ । त्यहा फसिकेवमा फेरी फर्सी फल्ने छन । ऐले फर्सी साह्रै महँगो भयो । अब फसी केवमा फर्सी फलेर खाने मान्छे नै हुँदैन नि । थगु छेँ फसी गानागानाँ, कर्पिनी फसी सुना खावनीः भन्ने नेवाः उखान अब फेरी सुरु हुनेछ । हो अब नेवाःचाहरु साँच्चीक्कै पुरै नेवा भएर उत्रने छन । ऐले आधाउँधी जो भाछन नि है ? “नेपाः मन्दल’ हो नेपा मन्दल नै राखौं नि हुन्न ? राजा मरेर राज्य सुन्ने भएन क्यार, जाबो न्युरोडमा माडे, बाहुन, छेत्री, मगर, राइ आदी इत्यादीका बेपार घटे भागे के फरक पर्छ ?

नेवा : त्यसै नि प्रगती नगर्ने, लप्पन-छप्पन गरेर अकुत सम्पती नजोड्ने । हूतिहारा डरछेरुवा, एउटै घरमा पुस्तैनी रिस पालेर सडै बसीरहन मन पराउने जिनिस हो क्यार ! अब, ती दिन फेरि फर्कने छन । भाषा त स्वीकारी नै सक्यो क्यार राज्य ब्यबस्थाले । अब बस्ती पनि फेरी नेवाः नै नेवाः बाट गुलजार हुने भो । क्या खासाको आइडिया फुर्या हो । मान्नु पर्छ ग्यान्ड डिजाइनरज्युको दिमागलाई ।

अँ, अनि थप कुरा नि- पद्मकन्या क्यामपसहरु फेरी भरिने भो । बाल्सेवा, कन्या सकूल, नव आदर्श, परोपकार, नेपाल आदर्श, कान्ती इश्वरी स्कूल, कन्या मन्दिरहरु सबै नेवा विद्यार्थीहरुबाट भरीभराउ हुने भो । किबकि जब नो ब्यापार केको काठमाडौं बसाइ नि ?

नेवाः सँग त त्यती पैसा हुँदैन नि प्राइभेट स्कूल कलेज् पढ्न । उसै त धमाधम प्राइभेट कलेज सुन्य हुँदैछ क्यार । थप बिदेश पढ्न जाने उतै हराउने युगमा काठमाडौं नि सुन्य भएसी केको ब्यापार ? केको स्कूल कलेज लगानी नि ? जान्छ हेटौंडा सेटौडा, काभ्रेसाभ्रे, आदीत्यादी स्मार्ट सिटी जो बन्दै छ रे हल्ला सुनेको । सित्ती, तिर जाउजाउ, हामीलाई त बालेन सिटी जिन्दाबाद मखुला पासा ? लु अब केके थप्ने हो थप्नु, हामीलाई के छ ? एक पाउ राङाको मासु भयसँग आलु मुलामा गोल्भ्यारा, प्वाटेचा, मिसमास गरेर तङ्ङ झोल तर्कारी खाए पुग्छ । तिमीहरुलाई जस्तो सिङो खसी ढाल्नु पर्दैन क्यार । सस्तोमा जीवन चलेको थियो फेरी चल्छ । आहाहा क्या रमाइलो र पावन द्रिस्य म देखिराछु तर होला र भन्या एस्तो छलाङ मार्ने परिवर्तन ?

अँ, अन्तमा नारायनमान बिजुक्छेज्युको म त फ्यान हुँ नि । म फलवर चाँहीं होइन है । मलाई उहाको २० बर्ष जती अघिको सय बर्ष पछिको भक्तपुर पुस्तकले पारेको प्रभाब हो । हुनसक्छ, त, म खोजीराछु सय बर्ष पछीको काठमान्डौ अर्थात यें देः है त ।

# यसवर्ष तहाननीबाट थिमि भैलः प्रदर्शन हुने



भक्तपुर । मध्यपुर थिमिमा भाद्र कृष्ण द्वितिया देखि पञ्चमीसम्म चार रात नचाईने थिमि भैलः प्याखँ यसवर्ष वडा नं. ५ ताहाननीबाट प्रदर्शन हुने भएको छ । गाईजात्राको भोलीपल्टको रातीबाट प्रदर्शन गरिने यो प्याखँ करिव २० वर्ष पछि ताहाननीबाट प्रदर्शन हुन लागेको जनाइको छ ।

प्याखँको तयारी गुरु पूर्णिमाबाट औपचारिक शुरुवात गरिएको छ । गुरु पूर्णिमाको राती प्याखँका गुरुहरुलाई सम्मानका साथ सगुन दिई गुरु थापना गरी प्याखँको औपचारिक शुरुवात गरिएको व्यवस्थापन समितिका सदस्यले बताएको छ ।

थिमि भैलः प्याखँमा न्हापाँ भैल, लिपाँ भैल, ज्यापुंगः, न्हापाँ दागीँ र लिपाँ दागीँ गरी कुल पाँच जना देवीदेवता रहन्छ । यसवर्ष थिमि भैलः प्याखँमा कृशल प्रजापतिले ज्यापुंग, अशोक प्रजापतिले न्हापा भैलः, बालमुकुन्द प्रजापतिले लिपा भैलः, आयुष प्रजापतिले न्हापाँ दाँगी, साहिल प्रजापतिले लिपा दाँगीको भूमिका निर्वाह गर्दैछन ।

थिमिका परम्परागत प्याखँ एवम् वाद्यवादन गुरु श्रीगोपाल प्रजापतिको नेतृत्वमा कृष्ण बहादुर प्रजापति, बालकृष्ण प्रजापतिलगायतले प्याखँको प्रशिक्षण गराइरहेको छ । त्यसैगरी वाद्यवादनतर्फ धाँ बाजा, भुस्या, मुवाली र पुंगा बजाउने वाद्यवादकहरु करिव ३ दर्जनको संख्यामा रहेका छन । यसका साथै प्याखँका कलाकारका सहयोगी समेत करिव ५० जनाको टोली भैल प्याखँमा सहभागी रहेको व्यवस्थापन समितिका एक सदस्यले जानकारी दिएको छ ।

भैलः प्याखँ सम्बन्धी किंवदन्ती अनुसार तत्कालिन समयमा थिमि क्षेत्रका जनताहरुलाई भूत प्रेतले अत्याधिक दुःख दिइरहेको, रातको समयमा मात्र नभई दिनको समयमा पनि दुःख दिन थालेपछि किसानहरु खेतीपाती गर्न जान पनि डराउन थाल्यो । त्यसपछि देशमा हाहाकार मच्चियो । जनताहरु दरबारको राजालाई गुहार्न गयो र राजाले तान्त्रिक, विद्वान, नामुद शास्त्रज्ञहरुसंग छलफल गर्दा मानिसहरुमा तान्त्रिक रुपमा भैरव जगाइ टोलटोलमा क्रोधित मुद्रामा नचाएमा भूतप्रेतहरु टिक्न नसक्ने सल्लाह दिए । सोही आधारमा थिमिमा भैलः प्याख“ सञ्चालनमा आएको लोकोक्ती रहेको छ ।

# चीन भ्रमणमा गएका महिला सांसदहरू स्वदेश फिर्ता

काठमाडौँ । अखिल चीन महिला महासंघ र चीन अन्तर्राष्ट्रिय विकास सहयोग एजेन्सीको आयोजना तथा महिला विश्वविद्यालय चीनको आयोजनामा चीन भ्रमणमा गएका महिला सांसदहरूको टोली स्वदेश फिर्ता भएका छन् । ‘दक्षिण एशियाली महिला राजनीतिक नेतृत्वसम्बन्धी सेमिनार’मा सहभागी हुन चीन भ्रमणमा गएका महिला सांसदहरू सेमिनारमा सहभागितासँगै उच्च तहको भेटघाटमा सहभागी भएका छन् । सांसदहरूले चिनियाँ अन्तर्राष्ट्रिय विकास सहयोग एजेन्सीका महानिर्देशक लुओ चाओहुईसँग भेट गरेका थिए । महानिर्देशक लुओ केही समयअगाडि लगानी सम्मेलनमा भाग लिन नेपाल आएका थिए । नेपाली महिला सांसदको ११ सदस्यीय टोलीले माल्दिभ्सकी उच्चशिक्षा मन्त्री मारियाको नेतृत्वमा लुओसङ्ग संयुक्त भेट गरेको हो । भेटमा महानिर्देशक लुओले दक्षिण एसियामा लैंगिक समानता र महिला तथा बालबालिकाको विकासमा चीनले सहयोग गर्नसक्ने बताएका थिए ।

लुओले कोभिड-१९ महामारीका कारण धेरै समस्याको सामना गरेपनि अहिले विस्तारै सबै कुरा लयमा आएको बताएका थिए । ‘राजनीतिमा महिला नेतृत्वको अवस्था राम्रो हुँदै गएको छ । यो भ्रमणका क्रममा तपाईले चीन र यहाँ भएको महिला नेतृत्वको विषयमा अझ बुझ्न सक्नुहुनेछ’, उनले भनेका थिए, ‘ अब दिगो विकास लक्ष्य पुरा गर्न ६ वर्ष बाँकी छ । यो धेरै महत्वपूर्ण विषय हो । जुन हामीले गर्नैपर्नेछ ।’

त्यस अवसरमा माल्दिभ्सको विदेश मामिला मन्त्रालयका राज्यमन्त्री शेरीना अब्दुल समदले माल्दिभ्समा ५२ प्रतिशत महिलाको जनसंख्या भएपनि नेतृत्वमा निकै न्यून सहभागिता रहेको बताएका थिए । समस्या कहाँ छ ? के कारणले महिलाहरू नेतृत्वदायी भूमिकामा आउन सकेन भनेर त्यसको पहिचान गर्न आवश्यक रहेको मन्त्री समदले बताएकी थिइन् ।

त्यस्तै श्रीलंकन महिला तथा बालबालिका राज्यमन्त्री गीता समन्माली कुमारसिंघे, श्रीलंकन स्वास्थ्य राज्यमन्त्री सीथा लगायतले धारणा राखेका थिए । नेपालको तर्फबाट भ्रमण टोलीको नेतृत्व गरेकी सांसद शुसिला श्रेष्ठले राजनीतिक रूपमा नेपालमा महिलाका निम्ति ३३ प्रतिशत संघ र प्रदेशको संसदमा महिला सहभागिता सुनिश्चित गरिएको र स्थानीय तहमा करिब ४४ प्रतिशत भन्दा बढी महिला नेतृत्व रहेको बताएकी थिइन् । तर अझैपनि मूल नेतृत्वमा महिलाको सहभागीता बढाउनका निम्ति काम गर्नुपर्ने अवस्था रहेको उनको भनाई थियो ।

नेपाललगायत श्रीलंका, माल्दिभ्स र पाकिस्तानका महिला मन्त्री तथा सांसदहरुले सेमिनारमा सहभागिता जनाएका थिए । यस्तै महिला सांसदहरू बेइजिङमा आयोजित ‘ ग्लोबल शेयर्ड डेभलपमेन्ट एक्सन फोरमको दोस्रो उच्चस्तरीय बैठक’मा पनि सहभागि भएका थिए । यो अर्को एउटा उच्चस्तरीय बैठक हो । उक्त बैठकको उद्घाटन समारोहमा मन्त्री तथा सांसदहरु सहभागी भएका हुन् । उक्त बैठकलाई चिनियाँ विदेशमन्त्री वाङ यीले सम्बोधन गरेका थिए ।

असार २४ गते राती चाइना साउदर्नको उडान नम्बर सिजेड ३०६८ मा ११ जनाको टोली काठमाडौंबाट ग्वाङ्चौ हुँदै बेइजिङ गएको थियो । प्रतिनिधि सभा सदस्य सुशीला श्रेष्ठको नेतृत्वमा गएको टोलीमा प्रतिनिधि सभाका सदस्यहरू सूर्यकुमारी श्रेष्ठ, ईश्वरी घर्ती, दुर्गा राई, हर्कमाया विश्वकर्मा, कल्पना मियाँ कुसारी, बिनिताकुमारी सिंह र कोशी प्रदेशसभा सदस्य ललिताकुमारी चौधरी सहभागी थिए । महिला, बालबालिका तथा ज्येष्ठ नागरिक मन्त्रालयले समन्वय गरेको उक्त भ्रमणमा मन्त्रालयका विज्ञ समिति सदस्य राजकुमारी चौधरी, शाखा अधिकृत प्रतिमा ढकाल र स.नि. देविका घर्ती मगर समेत सहभागी थिए ।

उक्त भ्रमण टोलीले चिनियाँ कम्युनिष्ट पार्टीको विदेश विभाग, परराष्ट्र मन्त्रालय चीन, अखिल चीन महिला महासंघ, चिनियाँ कम्युनिष्ट पार्टी केन्द्रीय कमिटिको पार्टी स्कुलसँग भेटघाट गरी महिला राजनीतिज्ञको नेतृत्वमा सहभागिता, महिला तथा बालबालिकाको समग्र अवस्था कसरी राम्रो बनाउन सकिन्छ भन्ने सन्दर्भमा महत्वपूर्ण छलफल गरेको थियो ।

टोलीले चीनको राजधानी बेइजिङमा रहेको चिनियाँ कम्युनिष्ट पार्टीको केन्द्रीय सङ्ग्रहालय, महिला विश्वविद्यालय चीन, चिनियाँ राष्ट्रिय महिला तथा बालबालिका सङ्ग्रहालय, ग्रेट वाललगायतको अध्ययन/अवलोकन समेत गरेको थियो ।

नेपाली सांसदहरूको भ्रमण टोलीले बेइजिङस्थित नेपाली राजदूत विष्णुपुकार श्रेष्ठको विशेष आमन्त्रणमा नेपाली राजदूतावासमा भेटघाट गरी भ्रमणका सन्दर्भमा छलफल समेत गरेको थियो । जुलाई १४ मा भ्रमण टोली हाइस्पिड ट्रेनको यात्रा गरेर जियाङ्सु प्रान्तस्थित नानजिङ शहर प्रस्थान गरेको थियो । नानजिङ शहरमा भ्रमण टोलीले पुकोउ जिल्लास्थित बुलाओ गाउँमा रहेको महिला उद्यमशिलताको अध्ययन अवलोकन गरेको थियो भने जिनाऐ जिल्लामा अवस्थित महिला र बालबालिकाको अधिकार संरक्षण सेवा केन्द्रको अवलोकन गरेको थियो । जहाँ विवाह र पारिवारिक घटनाका सन्दर्भमा कसरी काउन्शिलिङ सेवा प्रदान गरिदै आएको छ भन्ने विषयमा विस्तृत रूपमा देखाइएको थियो ।

त्यस्तै महिला महासंघको व्र्ष्कयअजयग मानव संसाधन सेवा औद्योगिक पार्कको क्जबयजगब कार्यशाला भ्रमण गरिएको थियो भने त्घ गो नानजिङ चालक महिला महासंघको अध्ययन अवलोकन गरिएको थियो । टोलीले नानजिङ शहरमै अवस्थित मेइयुआन न्यू भिलेज मेमोरियल हलको भ्रमण, देङ यिङचाओको जन्मको १२०औं वार्षिकोत्सव, मेइयुआन नयाँ गाउँ मेमोरियल हलमा महिला महासंघको विशेष प्रदर्शनी समेत अध्ययन अवलोकन गरेको थियो ।

झाओजियास्थित बाल-मैत्री ब्लकमा बालमैत्री सिकाई, सुझौ आर्टिफिसियल इन्टेलिजेन्स औद्योगिक पार्कको अध्ययन अवलोकन गरेको थियो । यसरी करिब १०/११ दिनको भ्रमण पुरा गरी नेपाली सांसदहरूको टोली सुजोउबाट साङ्घाई हुँदै हङकङ भएर स्वदेश फिर्ता भएको छ ।

# पृथ्वीको नजिकै अवस्थित छ डायमण्ड प्लानेट (बुध ग्रह)

एजेन्सी । हालसालै चीन र बेल्जियमका वैज्ञानिकहरूको संयुक्त टोलीले एउटा चकित पार्ने खोज गरेका छन् । उनीहरूले सूर्यको सबैभन्दा नजिकको ग्रह बुधको अनुसन्धान गरिरहेका थिए, जब उनीहरूले त्यहाँ देखिएका केही कुरामा विश्वास गर्न सकेनन् । उनीहरुले यस ग्रहको सतहमा करिब ९ माइल (१४ किलोमिटर) बाक्लो हीराको तह बन्न सक्ने सम्भावना रहेको दाबी गरेका छन् । उनले नेचर कम्युनिकेसन्स जर्नलमा आफ्नो निष्कर्ष प्रकाशित गर्दै, “बुधमा हीरा-वाहक कोर-मन्टल बाउन्ड्री ।“ ‘कार्बन-स्याचुरेटेड स्याग्मा महासागरमा क्रिस्टलाइजेसन’ भएर हीरा बनेको हुनसक्ने वैज्ञानिकहरूको अनुमान छ, तर ग्रह चिसो भएपछि हीरा ग्रेफाइटमा परिणत भयो । ग्रेफाइट र हीरा दुबै कार्बनका आइसोमर हुन् । ग्रेफाइटमा, कार्बन परमाणुहरू हेक्सागोनल नेटमा एकअर्कासँग जोडिएका हुन्छन्, जबकि हीरामा, कार्बन परमाणुहरू टेट्राहेड्रल संरचनामा एकअर्कासँग जोडिएका हुन्छन् ।

बुधमा हीराको तहको गठनको सन्दर्भमा, वैज्ञानिकहरूले उच्च दबाव, तापक्रम र थर्मोडायनामिक मोडेलिङ प्रयोग गरेर ग्रहको भित्री अवस्थाहरू पुनः बुझ्ने प्रयास गरे । यस प्रक्रियाले उनीहरूलाई सन्तुलनमा खनिजहरू अध्ययन गर्न मद्दत गर्‍यो । तिनीहरूले भेट्टाए कि बुधको फलामको अयस्कमा सल्फरको उपस्थितिले क्रिस्टलाइजेशन प्रक्रियालाई सहयोग पुर्‍याउँछ जसको परिणामस्वरूप कोर मेन्टल सीमामा हीरा बन्दछ । हीराको तहले ग्रहको तापक्रम उच्च राख्छ । जसका कारण यसले थर्मल चालकता र चुम्बकीय क्षेत्रको निर्माणलाई असर गर्छ । यो तहले कोरबाट आवरणमा तातो स्थानान्तरणमा मद्दत गर्छ ।

कतै हिरा-सुन छ भन्ने थाहा भयो भने लुट्न थाल्छन् त ? यस्तो अवस्थामा कुनै ग्रहमा हीराको ९ माइल लामो तहको उपस्थितिले मानिसको लोभ बढाउन सक्छ, यद्यपि यहाँ हीराको उत्खनन लगभग असम्भव छ । यस खोजले हामीलाई बुध ग्रहको चुम्बकीय क्षेत्र वा भूवैज्ञानिक संरचनाहरू जस्ता अद्वितीय विशेषताहरूका लागि व्याख्याहरू फेला पार्ने अवसर दिन सक्छ । वैज्ञानिकहरूले उल्लेख गरे कि हीराको उपस्थिति सम्भव थियो, तर यो पनि भने कि डाटाको आधारमा यो सम्भव छैन कि “हीरा म्याग्माको महासागरमा थियो ।“ यस अध्ययनले बुधमा देखिएका प्रक्रियाहरू अन्य ग्रहहरूमा पनि फेला पार्न सकिन्छ र त्यहाँ पनि यस्तै हीराको तहहरू पत्ता लगाउन सकिन्छ भन्ने निष्कर्ष निकालेको छ ।

नासाको मेसेन्जर, वा बुध सतह, अन्तरिक्ष वातावरण, भू-रसायन, र रेंजिंग, बुध ग्रहको परिक्रमा गर्ने पहिलो अन्तरिक्ष यान थियो, जबकि यसको डेटा ग्रहको भूविज्ञान अध्ययन गर्ने वैज्ञानिकहरूको लागि सान्दर्भिक छ क्षेत्र र रासायनिक संरचना । उनीहरूले बुधमा प्रचुर मात्रामा कार्बन फेला पारे जुन आदिम ग्रेफाइट फ्लोटेशन क्रस्टको परिणाम हो भन्ने विश्वास गरिन्छ ।

# कमला ह्यारिसलाई पार्टीभित्रको समर्थन प्राप्त

एजेन्सी । अमेरिकामा राष्ट्रपतिको निर्वाचन रोचक चरणमा पुगेको छ । उपराष्ट्रपति तथा डेमोक्र्याट नेतृ कमला ह्यारिसले उम्मेदवार बन्न आफ्नो पार्टीभित्र आवश्यक समर्थन जुटाएको बताइएको छ । तर यसको औपचारिक घोषणा हुन बाँकी छ । उनले विज्ञप्ति जारी गर्दै पार्टीका नेताहरुलाई धन्यवाद दिएका छन् । दुई दिनअघि राष्ट्रपति जो बाइडेनले राष्ट्रपति बन्ने दौडबाट पछि हटेपछि कमला ह्यारिसका लागि यो ठूलो सफलता हो । जो बाइडेनले कमला ह्यारिसको उम्मेदवारी प्रस्ताव गरेका थिए । त्यसपछि डेमोक्र्याटिक पार्टीका प्रमुख नेताहरूले कमला ह्यारिसलाई यो दौडमा सामेल हुन समर्थन जनाएका थिए ।

बाइडेनको उम्मेदवारीलाई लिएर पार्टी भित्रको डेमोक्र्याटिक पार्टीका निर्वाचित अधिकारीहरू, पार्टी नेताहरू र संगठनहरूले बहस अन्त्य गर्दै ह्यारिसको समर्थन गर्ने जनाएको छ । राष्ट्रपति जो बाइडेनले आगामी राष्ट्रपतीय निर्वाचनमा उम्मेदवारी नदिने आइतबार घोषणा गरेका छन् । योसँगै उनले डेमोक्रेटिक पार्टीबाट राष्ट्रपतिको उम्मेदवारका रुपमा उपराष्ट्रपति कमला ह्यारिसको नामलाई प्रस्ताव गरेका थिए ।

विज्ञहरूका अनुसार ह्यारिस र ट्रम्प बीचको चुनावको विश्लेषण गर्न धेरै हतार हुनेछ । ह्यारिस आज भन्दा पहिले राष्ट्रपति पदका उम्मेदवार थिएनन् र राष्ट्रपतिको दौडमा बाइडेनको उपस्थितिले ह्यारिस भन्दा उनको राम्रो अवस्थाको व्याख्या गर्दछ । सीबीएस न्यूजका लागि हालैको राष्ट्रिय सर्वेक्षणले ट्रम्पलाई बाइडेनमाथि पाँच अंक र ह्यारिसमाथि तीन अंकको अग्रता रहेका परिणाम दिएको छ ।

रिपब्लिकन पार्टीका उपराष्ट्रपति पदका उम्मेदवार जेडी भान्सले सोमबार आफ्नो प्रारम्भिक चुनावी सभामा वर्तमान उपराष्ट्रपति कमला ह्यारिसमाथि कडा रुपमा प्रस्तुत भएका छन् । ओहायो सिनेटरले भर्जिनियाको रेडफोर्डमा साँझको र्‍यालीलाई सम्बोधन गर्नु अघि मिडलटाउनको आफ्नो पूर्व हाई स्कूलमा प्रचार गरे । भ्यान्सले भर्जिनियामा भने कि इतिहासले जो बाइडेनलाई क्षेत्र छाड्ने मानिसका साथै अमेरिकी इतिहासको सबैभन्दा खराब राष्ट्रपतिको रूपमा सम्झनेछ । तर मेरा साथीहरू, कमला ह्यारिस उनीहरूभन्दा लाखौं गुणा खराब छिन् र यो सबैलाई थाहा छ । उनले जो बाइडेनको हरेक असफलता पुष्टि गरेका छन् र राष्ट्रपतिको रूपमा सेवा गर्ने उनको (बिडेनको) मानसिक क्षमताको बारेमा झूट बोलेका छन् ।

अमेरिकी उपराष्ट्रपति कमला ह्यारिसले रिपब्लिकन पार्टीका उम्मेदवार डोनाल्ड ट्रम्पमाथि कडा हमला गर्दै राष्ट्रपति चुनावी अभियान सुरु गरेकी छन् । उनले पूर्वराष्ट्रपतिले देशलाई पछाडि लैजान खोजेको आरोप लगाए । सोमबार डेलावेयरको विल्मिङ्टनमा आफ्नो अभियान टोलीलाई सम्बोधन गर्दै कमला (५९)ले ट्रम्पको विवादास्पद परियोजना २०२५ ले मध्यमवर्गलाई कमजोर बनाउने र देशलाई फेरि असफल नीतितर्फ लैजाने बताइन् जसअन्तर्गत अर्बपति र ठूला कम्पनीहरूलाई करमा ठूलो छुट दिइएको थियो । त्यसको क्षतिपूर्ति सामान्य कामदारहरूबाट गराइयो ।

# बिश्वमै पानीमा अक्सिजनको मात्रा घट्दैछ

एजेन्सी । विश्वभरका सबै नदी, खोला, ताल, झरना र समुद्रको पानीमा घुलनशील अक्सिजन तीव्र गतिमा घट्दै गएको छ । यो सारा संसारका लागि ठूलो खतरा हो । यदि यसरी नै भइरह्यो भने पहिले यी पानीमा बस्ने जीवजन्तु खतरामा पर्नेछ र त्यसपछि विश्वभरका मानव जातिलाई असर गर्न थाल्नेछ । वैज्ञानिकहरूले भनेका छन् कि यदि यो प्रक्रिया जारी रह्यो भने यो संसारको जीवनको लागि सबैभन्दा ठूलो खतरा हुनेछ ।

जसरी वायुमण्डलमा अक्सिजन हाम्रो लागि महत्त्वपूर्ण छ । त्यसैगरी, पानीमा घुलनशील अक्सिजन पनि स्वस्थ जलीय पारिस्थितिका लागि महत्त्वपूर्ण छ । ताजा पानी होस् वा महासागर, जीवन दुवैसँग जोडिएको हुन्छ । त्यहाँ बस्ने जनावरहरू तबसम्म जीवित रहन्छन् जबसम्म तिनीहरूको लागि पानीमा आवश्यक अक्सिजन मिसिन्छ । जलीय जनावरहरूको जीवन हामी सबैको लागि महत्त्वपूर्ण छ ।

तातो पानीमा अक्सिजन कम हुन थाल्छ

पानीमा घुल्ने अक्सिजनको मात्रा धेरै कारणले घट्छ । उदाहरणका लागि, तातो पानीमा घुलनशील अक्सिजनको मात्रा समान रहँदैन । हरितगृह ग्यास उत्सर्जनका कारण हावा र पानीको तापक्रम दीर्घकालीन औसतभन्दा माथि रहन्छ, जसका कारण भित्रको अक्सिजन पनि घट्दै गएको छ । सतहको पानीले अक्सिजन जस्ता महत्त्वपूर्ण तत्वहरू राख्ने क्षमता कम हुँदै गइरहेको छ ।

पानीबाट हुने अक्सिजनले पनि औद्योगिक फोहोर हटाउँदैछ

पानीमा घुल्ने अक्सिजन सोसाउने यो अक्सिजन हटाउन कृषि तथा घरेलु मल, ढल र औद्योगिक फोहोरको पनि महत्वपूर्ण योगदान छ ।

यसले पानीमा बस्ने जनावर हरूलाई कसरी असर गर्छ?

जब अक्सिजन कम हुन थाल्छ, सूक्ष्मजीवहरू निसास्साउन थाल्छन् र तिनीहरू मर्छन् । ढिलो वा पछि, यसले ठूला प्रजातिहरूलाई पनि असर गर्छ । मृत जैविक पदार्थको भण्डारमा अक्सिजन फीडमा निर्भर नहुने सूक्ष्मजीवहरूको जनसंख्या, जसले गर्दा प्रकाश कम हुन्छ र प्रकाश संश्लेषण धेरै सीमित हुन्छ, जसले गर्दा सम्पूर्ण जल शरीर एक दुष्ट चक्रमा फस्छ, यसलाई युट्रोफिकेशन भनिन्छ ।

पानी तीव्र गतिमा तातो हुनुका साथै हिउँ पग्लिएर समुन्द्रको सतहको लवणतामा कमी आउनुका कारण जलीय अक्सिजनको अभाव भइरहेको छ । भर्खरै केही वैज्ञानिकहरूले अक्सिजनको कमीको बारेमा चेतावनी दिएका छन्।

यो पानीमा मृत क्षेत्र बढ्दै गएको छ

विश्वका जल निकायहरूमा अक्सिजनको चिन्ताजनक कमीलाई डिअक्सिजनेशनको रूपमा पनि हेरिएको छ, जुन जलीय पारिस्थितिक प्रणाली र मानव जीवनको लागि खतरा हो । यसले "मृत क्षेत्रहरू" को विस्तारमा जान्छ । यसले माछाको जीवनलाई मात्रै नभई पानीको गुणस्तरमा समेत असर गर्छ ।

डिअक्सिजनेशनले माछा, शेलफिश, कोरल र अन्य समुद्री जीवहरूको सामूहिक मृत्यु हुन सक्छ । यी अक्सिजन-ह्रास क्षेत्रहरू, प्रायः "डेड जोन" भनिन्छ, सम्पूर्ण खाद्य जालहरू बाधा पुर्‍याउँछ र प्रजातिहरूको वितरणमा महत्त्वपूर्ण परिवर्तन ल्याउन सक्छ ।

यसले हरितगृह ग्यासको उत्पादन बढाउनेछ

ताजा पानी प्रणालीहरूमा, कम अक्सिजन स्तरले माइक्रोबियल प्रक्रियाहरू परिवर्तन गर्न सक्छ, सम्भावित रूपमा शक्तिशाली हरितगृह ग्यासहरू जस्तै मिथेन र नाइट्रस अक्साइडको उत्पादन बढाउन सक्छ। यसले खतरनाक प्रतिक्रिया लूप सिर्जना गर्दछ, किनकि यी ग्यासहरूले थप ग्लोबल वार्मिङमा योगदान पुऱ्याउँछन् । थप रूपमा, तटीय पानीमा कम अक्सिजन अवस्थाले तलछटबाट फस्फोरसको रिलीजलाई ट्रिगर गर्न सक्छ, पोषक तत्व प्रदूषण बढाउँछ र सम्भावित हानिकारक अल्गल ब्लुमहरू ।

सन् १९६० यता अक्सिजनमा कमी आएको छ

पृथ्वीको पानीमा अक्सिजनको कमीको मात्रा चिन्ताजनक छ । महासागरहरूमा घुलनशील अक्सिजन १९६० देखि २% ले घटेको छ, केही क्षेत्रहरूले २०-५०% को अधिक गम्भीर क्षतिको अनुभव गरिरहेका छन् ।

तटीय पानीमा हाइपोक्सिक साइटहरूको संख्या १९६० भन्दा पहिले ४५ बाट बढेर २०११ मा लगभग ७०० पुगेको छ । ताजा पानी प्रणालीहरूमा, स्थिति समान रूपमा चिन्ताजनक छ, समशीतोष्ण तालहरूले महासागरहरू भन्दा छिटो अक्सिजन गुमाउँछन् । अनुमान अनुसार, व्यापार-समान्य परिदृश्य अन्तर्गत २१०० सम्म समुद्री अक्सिजनमा ३-४% थप घाटा हुन सक्छ ।

पानीमा कति अक्सिजन हुनुपर्छ ?

स्वस्थ पानीमा सामान्यतया ६.५-८ मिलीग्राम/लिटरभन्दा माथि घुलिएको अक्सिजन सांद्रता हुनुपर्छ । धेरैजसो जलीय जीवहरूलाई बाँच्नको लागि न्यूनतम ४ मिलीग्राम/लिटर अक्सिजन चाहिन्छ । माछा बाँच्नको लागि कम्तिमा ५ मिलीग्राम/लिटर आवश्यक हुन्छ । चिसो पानीमा घुलनशील अक्सिजनको उच्च स्तर हुन सक्छ, जबकि तातो पानीमा कम अक्सिजन घुलनशीलता हुन्छ ।

# ब्लु डायमन्ड सोसाइटीको अनियमितताबारे अख्तियारले थाल्यो छानबिन

काठमाडौं : यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायको नाममा दातृ निकायबाट प्राप्त अनुदानमा अनियमितता भएको उजुरीमाथि छानबिन सुरु भएको छ।

नील हिरा समाज (ब्लु डायमन्ड सोसाइटी, यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यकहरूको महासङ्घ नेपाल (एफएसजीएमएन) क्रुजएड्स नेपाल, मितिनी नेपाल, क्वेयर ग्रुप, क्याम्पेन फर चेन्ज संस्थाहरूले अनुदान रकममा गरेको अनियमितताबारे छानबिन सुरु भएको हो।

अख्तियार दुरुपयोग अनुसन्धान आयोगले यी संस्थाहरूको अपारदर्शी कामको छानबिन गर्ने निर्णय गत जेठ २८ गते नै गरेको जानकारी दिएको छ। आयोगका सूचना अधिकारी देवी प्रसाद थपलियाले छानबिनको निर्णय गरेर महिला,बालबालिका तथा ज्येष्ठ नागरिक मन्त्रालयमा फाइल पठाइएको जानकारी दिए।

मन्त्रालयका सचिवलाई लेखी पठाउने निर्णय आयोगले गरेको थपलियाले बताए। अख्तियारबाट छानबिनका लागि फाइल प्राप्त भएको मन्त्रालयले जनाएको छ। मन्त्रालयले यी संस्थाहरूको अनियमितताबारे छानबिन गर्न समाज कल्याण परिषद्मा पठाउने तयारी गरेको जानकारी दिएको छ।

आफू नगर्ने र अरूले गर्न लागे विरोध गरेर भाँड्ने काममा लागिरहने ब्लु डायमन्ड सोसाइटीको नेतृत्वमाथि युएसएआडी अन्तर्गत एफएचआइ ३६० को सहयोग लिएर हर्मोन खान र यौनाङ्ग प्रत्यारोपण गर्न उक्साएको आरोप समेत लागेको छ।

पैसा हुनेले त हर्मोन खालान्, लिङ्ग परिवर्तन गर्लान्? के उनीहरू मात्रै तेस्रो लिङ्गी हुने हो? स्वार्थका लागि गठित संस्थाहरूले यस्तो भ्रम फैलाएपछि कीर्तिपुरमा रहेको समर्पण सभ्य समाज नेपालका सचिव हनि महर्जनले सामाजिक सञ्जालमा कतिपय व्यक्तिले आफ्नो शरीरमा यसको उपयोग नगर्न पनि सक्छन्! यसको मतलब यो होइन कि उहाँ तेस्रो लिङ्गी नै होइन! उहाँको मन आत्मादेखि त उहाँ तेस्रो लिङ्गी नै हुन्छ नि होइन र? भनेर लेखेका थिए। ब्लु डायमन्ड सोसाइटीकी अध्यक्ष सञ्जीव गुरुङ (शीतल, पिंकी) माथि नयाँ शक्ति पार्टीमा आबद्ध हुँदा विवेकशील आर्दर्श इन्भेस्टमेन्ट कम्पनी प्रा.लि.को रसिदमा जलविद्युत आयोजनाको सेयर बिक्री रकम अपचलन गरेको समेत आरोप लागेको छ। सेयर भरेका यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायलाई पिंकीले रकम के भयो? भन्दा जवाफ दिन सकेकी छैनन्। उनी सहित आरोप लागेका संस्थाका नेतृत्व समुदायले गरेका प्रश्नबाट भागिरहेका छन्।

केही मुट्ठीभर समुदायका हर्ताकर्ता भनिएकाहरूले गर्न नसकेको पहल गर्ने समुदायलाई पक्षपात गरिएको छ। यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यकहरूको इल्गा एसियाले गर्न लागेको सम्मेलनमा यही स्वार्थ समूहले चाहेका मात्रै सहभागी भएका छन्। समलिङ्गी तेस्रो लिङ्गी घृणाविरुद्धको अन्तर्राष्ट्रिय दिवसको अघिल्लो दिन नै आयोजना गरेको मिस पिंकमा सहभागीहरूलाई समेत अवसर नदिए पछि असन्तुष्टि छताछुल्ल भएको छ।

मिस पिंकको उपाधि अनमोल राईले पहिरिए पनि विवाद भए पछि फस्ट रनर अप सरोजी न्यौपानेलाई थाइल्यान्ड पठाउने आश्वासन दिएर थमथमाएको पाइएको छ। तर, इल्गा एसियाको सम्मेलनमा सहभागी छनौटलाई लिएर अर्को विवाद भएको छ। इल्गा बोर्डमा ब्लु डायमन्ड सोसाइटीकी कार्यकारी निर्देशक सुवेन ढकाल (मनीषा) छन्। उनले आफू अनुकूल नाम छनौट गरेको भन्दै समुदायमा तीव्र असन्तुष्टि छ।

समुदायमाथि समुदायकै नेतृत्वले गरेको विभेद, संस्थाभित्रको अपारदर्शिता लगायतमा राज्यको नियामक निकायले छानबिन थालेको हो। छानबिनबाट सत्यतथ्य बाहिर आउने लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यकले विश्वास व्यक्त गरेका छन्।



# अरुण थापा स्मृति सांगितिक कार्यक्रम सम्पन्न

भक्तपुर । गायक स्व. अरुण थापाको २५ औं स्मृति दिवसको अवसरमा भक्तपुर सांगेतिक समाजको आयोजनामा सम्पन्न भएको छ । कार्यक्रमको अन्तिम तिर वर्षा भए पनि न त गायक गायिकाहरुको प्रस्तुत रोकियो, न दर्शक श्रोताहरुले कार्यक्रमस्थल छाडे । झरीको बीच पनि सांगेतिक प्रस्तुती चलिरह्यो, निरन्तर चलिरह्यो । भक्तपुर सांगेतिक समाजले विगतका वर्षहरुमा जस्तै स्व. अरुण थापाको २५ औं स्मृति दिवसमा उनका समुधर संगीत र गीतमार्फत सम्झेका छन ।

मध्यपुर थिमि नगरपालिका र सिवर्ड इन्टरनेशनल कलेजको सहयोगमा कलेजको प्रांगणमा आयोजित कार्यक्रममा स्व. थापाले गाएका करिव दुई दर्जन गीतलाई विभिन्न गायकहरुले प्रस्तुत गरे । स्व. थापाको स्वरमा स्वरांकन गरिएको 'करोडौं मुटुहरु' बोलको गीतलाई समूह गायन मार्फत शुरु भएको कार्यक्रममा कुमारी लिम्बुले 'तिमी राम राम', श्रीजल मधिकर्मीले 'म रोए पनि तिमि हाँसी दिनु', विजय कायस्थले 'चोट के हो, व्यथा के हो', शम्भु राजभण्डारीले ' आँखाको निद', हरि सुन्दर लाखे श्रेष्ठले 'लाग्न थाल्यो जीवनमा', श्रीहरी दाहालले 'दोष कस्लाई', श्रेय अगस्तीले 'अरुसँग नखोज' र लक्ष्मण पलिखेलले 'ऋतुहरुमा तिमि' बोलको गित गाएर स्व. थापालाई सम्झँदैं श्रद्धा सुमन चढाएको थियो ।

यसैगरी मथुरा प्रधानले 'मेरो गीत सबै', आश्रय रञ्जितले 'साँझको जुन सँगैं', रुची घिमिरेले 'दुई दिनको', रविन थापाले 'जति माया लाए पनि', अर्पण विश्वकर्माले 'यो मनको के भर हुन्छ' र प्रनिल पलिखेलले 'भुलेका कथा तिता मीठा' र मुकुन्द भट्टराईले 'बरु भुलेछु' बोलको गीत गाएको थियो ।

कार्यक्रममा वरिष्ठ पप गायक ओमविक्रम बिष्टलाई समाजले सम्मान गरेको थियो । नेपालमा पप संगीतलाई श्रोतामाझ परिचित गराउने बिष्ट अमेरिकामा बसोबास गर्दै आएको छ । उनी नेपाल आएको अवसरमा समाजले दोसल्ला र सम्मानपत्रले सम्मान गरेको हो ।

पप गायक ओमविक्रम बिष्टको सम्मानमा कुबेर राईले मौनतामा अल्झिरहेको, सकुल अच्छामीले को हो त्यो जस्ले मलाई, राजेश शाहीले मेरो याद अझै आउँछ भने, बिनोदराज ढुङ्गेलले तारा मारङ बजार कि कान्छी र प्रबिन शाहीले आवाज देउ मलाई बोलको गित गाएको थियो ।

सोही अवसरमा समाजले बाल गायककार अर्पण विश्वकर्मालाई सम्झना खरेल प्रतिभा पुरस्कारले पुरस्कृत गरेको थियो । गायक विश्वकर्माले 'नेशनल गट ट्यालेन्ट हण्ट'मा उत्कृष्ट प्रस्तुती दिन सफल भएकोमा प्रोत्साहन स्वरुप नगद ५ हजारसहित उक्त पुरस्कारले वरिष्ठ रचनाकार भुषण खरेलले पुरस्कृत गरेको हो ।

कार्यक्रममा नगरपालिकाका प्रमुख सुरेन्द्र श्रेष्ठले भौतिक पूर्वाधारको विकास मात्र विकास नभई गीत संगीतको विकास र सांगेतिक कार्यक्रममार्फत प्रतिभावान कलाकार जन्माउनु पनि विकास भएको चर्चा गर्दै नगरपालिकाले यस्ता सांगेतिक कार्यक्रम र कलाकार हरुको प्रतिभा प्रस्फुटन गराउने र उनीहरुलाई अवसर प्रदान गर्ने कार्यक्रममा पनि लगानी गर्ने र सहयोग गर्ने प्रतिवद्धता जनाए ।

समाजका अध्यक्ष अल्वर्ट बज्राचार्यले समाजले अरुण थापाको स्मृतिमा मात्र नभई अन्य वरिष्ठ गायक गायिकाहरु पनि कार्यक्रम गरिएको जानकारी दिँदैं आगामी दिनमा पनि कलाकारहरुको प्रोत्साहित गर्ने कार्यक्रमलाई निरन्तरता दिने प्रतिवद्धता जनाए । कार्यक्रममा नगरपालिकाका नगर उपप्रमुख विजयकृष्ण श्रेष्ठलगायतको उपस्थिति रहेको थियो ।

# विश्वकै दुर्लभ ह्वेलमृत फेला परेको छ

एजेन्सी । जसरी मानिसलाई पृथ्वी बाहिरको संसार अर्थात् अन्तरिक्षको बारेमा सबै कुरा थाहा छैन, त्यसरी नै उनीहरूलाई समुन्द्रको गहिराइको बारेमा पनि सबै कुरा थाहा छैन । यही कारणले गर्दा धेरै पटक हामी समुन्द्रसँग सम्बन्धित यस्ता रहस्यको बारेमा जान्ने गर्छौं, जसले सबैलाई आश्चर्यमा पार्छ । हालै न्युजिल्यान्डमा यस्तै एउटा घटना बाहिर आएको छ, जसले समुन्द्र र समुद्री जीवसँग सम्बन्धित एउटा ठूलो रहस्यको पर्दाफास गरेको छ । वास्तवमा, यहाँ एउटा ठूलो माछा (न्यूजिल्याण्डमा भेटिएको दुर्लभ प्रजातिको ह्वेल) समुद्रबाट बगेर किनारमा आयो । जब वैज्ञानिकहरूले त्यो मरेको माछाको जाँच गरे, तिनीहरू छक्क परे, किनभने यो संसारको सबैभन्दा दुर्लभ प्रजाति व्हेल हो !

बीबीसी न्यूजका अनुसार यो महिनाको सुरुमा एक व्यक्तिले न्यूजिल्याण्डको समुद्र तटमा एउटा ठूलो मरेको माछा (विश्वको दुर्लभ ह्वेल) देखेका थिए । अब वैज्ञानिकहरुले अनुसन्धानपछि त्यो माछाको बारेमा पत्ता लगाएका छन् । यो कुदाल दाँत भएको ह्वेल हो जुन ह्वेलको धेरै दुर्लभ प्रजाति हो । यो यति दुर्लभ छ कि यो आज सम्म जीवित देखिएको छैन । यो ५ मिटर लामो प्राणीलाई यसको लामो चुच्चो जस्तो मुख, खोपडी, दाँत र यसको रङको ढाँचाबाट पहिचान गरिएको थियो ।

माछालाई कोल्ड स्टोरेजमा राखेर डिएनए परीक्षण भइरहेको छ । माछाको अन्तिम पहिचान पुष्टि हुन अझै केही हप्ता लाग्ने विज्ञहरुको दाबी छ । रिपोर्टका अनुसार हालसम्म कोदालो दाँत भएको ह्वेलसँग सम्बन्धित थोरै नमूनाहरू फेला परेका छन् र जिउँदो माछा अझै देखिएका छैनन्, त्यसैले अहिले यो माछाको बारेमा धेरै थाहा छैन ।

उनीहरुले फेला पारेको शवको सहयोगले माछाको बारेमा थप जानकारी पाउन मद्दत पुग्ने अनुसन्धानकर्ताहरुको विश्वास छ । जुलाई ४ मा यो ह्वेल न्यूजिल्याण्डको साउथ आइल्याण्डको ओटागा प्रान्तको किनारमा पसेको थियो । संरक्षण विभागका अधिकारी डेब डेभिसले एक विज्ञप्तिमा स्प्याड-टूथेड ह्वेल सबैभन्दा कम ज्ञात स्तनपायी प्राणी भएको र यससँग सम्बन्धित ६ नमूनाहरू मात्र रेकर्ड गरिएको बताए । यो प्रजाति पहिलो पटक सन् १८७४ मा माछाको तल्लो बङ्गारा र २ वटा दाँत भेटिएपछि थाहा भएको थियो ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

– प्रेमचन्द

## सम्पादकीय

### संसद नोकझोक गर्ने स्थल होइन !

संघीय संसदको प्रतिनिधि सभाको नियमित बैठक चलिरहेको छ। संसद्मा हुने बहस भने आम नागरिकको लागि रोचक हुने गरेको छ। किनकी त्यहाँ हुने बहसको विषय भनेको एकले अर्कालाई आरोप प्रयारोपण गर्ने कार्यमा मात्र सीमित हुने गरेको छ। अर्को पक्ष भनेको आफू विपक्षमा रहेको बेला देशैभर बेथिति र नीतिगत भ्रष्टाचार देख्ने र आम जनताको असहज स्थिति देख्ने नेताहरूले सत्ताको बागडोर सम्हालेको भोलीपल्ट देखि नै देशमा सुशासन, भ्रष्टाचार बिहीनता र जनजीवन सहज भएको देख्ने गरेको छ। मुख्यतया यीनै विषयमा हुने बहसले आम जनसमुदायलाई मनोरञ्जन दिने गरेको छ। यो नेपाली जनताको असहज र दुःखको समयमा पनि मन मष्तिकलाई तरोताज बनाउन चाहने खुराक अहिले संसद अधिवेशनमा चलिरहेको बहसले दिएको छ।

गत आइतबार प्रधानमन्त्री खड्गप्रसाद शर्मा ओलीले विश्वासको मत लिने क्रममा पनि प्रतिनिधि सभामा यीनै बिषयमा एकअर्कामाथि ढुङ्गा हानाहान गरे। एक साता अगाडि कायम रहेको सत्ता समीकरण फेरिनेबित्तिकै आरोप प्रत्यारोपमा उत्रे। एक साता अगाडिसम्म उनले हाँकेको रथका यात्री उनैका बिचारधाराका थिए जसले अहिले प्रधानमन्त्री ओलीमाथि भ्रष्टाचारीलाई जोगाउन समीकरण फेरेको आरोप लगाएका छन्। विपक्षमा हुँदा ओली पनि अरुमाथि यस्तै आरोप लगाउँथे।

'भ्रष्टाचारका मुद्दामा कारबाही' हुन थालेपछि नेपाली कांग्रेस र नेकपा एमाले मिलेको भन्ने विपक्षको आरोपलाई प्रधानमन्त्री ओलीले 'अपवाह'को संज्ञा दिएर उम्कन खोजेको देखियो । विशेषगरी गिरीबन्धु टी इस्टेटका विषयमा अफवाह फैलाइएको दाबी प्रधानमन्त्री ओलीको थियो। हुनत, प्रधानमन्त्री ओलीको अघिल्लो कार्यकालमा गिरीबन्धु टी इस्टेटको जग्गा सट्टापट्टाको व्यवस्था मिलाउँदा नीतिगत भ्रष्टाचार भएको आरोप अहिलेको सत्ता साझेदार नेपाली कांग्रेसले नै लगाएको थियो। अहिले आरोप लगाउनेहरु पहिले विपक्षमा थिए ने अहिले सहयात्री बनेको छन्।

अब गिरीबन्धुको विषय उठाउने नेपाली कांग्रेसका सांसदहरु प्रतिरक्षामा लाग्लान् त ? त्यो भने हेर्न बाँकी छ। त्यसैले सत्तामा जो पुगे पनि सत्ताका खेलाडीहरु भ्रष्टाचारका साँच्चै विरुद्ध हुन् भन्ने कुरा अब जनताले पत्याउँदैनन्। बरू सत्तापक्ष र विपक्षी बिच हुने नोकझोक भने हेर्न लायकको हुने गरेको छ।

उनले आफ्नो बचाउ गर्ने क्रममा प्रधानमन्त्री ओलीले एउटा विचारणीय प्रश्न गरेका छन्। कानुन बनाउँदा नीतिगत भ्रष्टाचार हुन्छ ? कानुन बनाउँदा भ्रष्टाचारको बात लागे पनि सजाय हुँदैन। सजाय नहुने भएपछि कसरी अपराध हुन्छ भनेजस्तै हो ओलीको प्रश्न। संसारभर नीति वा विधि निर्माताहरु राज्य वा समुदायलाई हानि भए पनि व्यक्ति वा समूह विशेषलाई लाभ हुनेगरी नियमकानुन निर्माण गर्न प्रवृत्त हुनेगरेको उदाहरण जताततै भेटिन्छ। यथार्थमा यसरी नै नियम कानुन बनाएर गरिने भ्रष्टाचारलाई नै ' नीतिगत' भनिने हो।

गिरीबन्धु टी इस्टेटको मामिलामा प्रधानमन्त्री ओलीको संलग्नतामा शंकाको सुविधा दिए पनि सर्वोच्च अदालतले खारेज गरिदिएको सरकारको निर्णय भने निःसन्देह नीतिगत भ्रष्टाचार नै थियो। प्रधानमन्त्री ओलीले 'अफवाह फैलाउने'हरु बिरूद्ध जवाफ दिएर मात्र होइन भ्रष्टाचार रोकेर देखाउन सक्नु पर्दछ। साथै संसद नोकझोक र आरोप प्रत्यारोपण गर्ने स्थल पनि होइन।

यसैले हाल देशमा देखिएको सहकारी ठगी प्रकरण, गिरीबन्धु टी इस्टेट, भुटानी शरणार्थी, बाल मन्दिर जग्गा हिनामिना, सुनकाण्डलगायतका सबै विवादित विषयको स्वतन्त्र छानबिन गराएर प्रधानमन्त्री ओलीले देशमा सुशासन कायम रहेको अनुभूति दिलाउन सक्ने गरि काम गर्नुपर्छ। यसरी संसदमा आरोप प्रत्यारापका साथ प्रतिवाद गर्दैमा न आम जनताले विश्वास गर्छन् न विपक्षीहरु नै चुप लाग्नेछन्। अबको सत्ता समीकरण असफल बनेमा भने यो देशमा रहेका मुलधारका राजनीतिक दल र आम जनसमुदायको लागि पनि दुर्भाग्य बन्नेछ।

# बाहिर झगडा, भित्र सहमतीको राजनीति

● संकेत कोइराला

यदि तपाईंलाई कसैले अपराधी, परजीवी, सुँगुर, राहु, शोषक अनि यस्तै जस्तो विशेषण प्रयोग ग-यो भने कस्तो लाग्छ ? पक्कै मुटु चिरिन्छ। तर यो विशेषण तपाईंलाई त्यतिबेला सामान्य लाग्छ, जब तपाईंको पुर्पुरोमा शरणार्थी नामको उपमाले घर जमाउँछ। शरणार्थीका लागि संयुक्त राष्ट्रसंघीय उच्चायोगद्वारा प्रकाशित 'शरणार्थी' नामक पुस्तकबाट माथि भनिएका शब्द झिकिएका हुन्। शरणार्थी समस्याको मूल जड भनेको राजनीति नै हो।

राजनीतिबाहेक जातीय दंगा, धर्म र भूभागका लागि लड्ने राष्ट्रले पनि शरणार्थी समस्या उब्जाएका छन्। जातीय दंग, धर्म र भूभागका लागि लड्नेबिच प्रत्यक्ष राजनीति नदेखिए पनि अप्रत्यक्ष राजनीतिका लागि राजनीतिज्ञले नै पर्दा पछाडिबाट यस्ता क्रियाकलाप सञ्चालन गरिरहेका हुन्छन्। अपवादका रुपमा ज्यादै न्यून मानिसलाई मात्रै खडेरी अतिवृष्टि, अनावृष्टि, बाढी, डढेलो जस्ता प्राकृतिक प्रकोपले शरणार्थी बनाएको छ।

शरणार्थी र गृहयुद्ध प्रेसका लागि समाचारका लागि राम्रा स्रोत बन्न सक्छन्। तर मानवीय दृष्टिले भने उनीहरुको जीवन अत्यन्त कष्टपूर्ण छ। राष्ट्र र जनतालाई भने यो समस्याले शून्यको अवस्थामा घचेटछ। ग्वाटेमाला, सियरालियोन, भियतनाम, म्यानमार, युगाण्डा, सुडान, सोमालिया, यमन र केन्या जस्ता देशमा भएको गृहयुद्धले मानिस थातथलो छोड्न बाध्य भए।

गृहयुद्ध हुनपूर्व देशको स्थिति कस्तो थियो ? युद्धपछि कस्तो स्थिति छ ? कस्ता राजनीतिक खेलबाट युद्धको श्रीगणेश भयो ? अनि यस्तै प्रश्नको उत्तर गहिरिएर खोज्ने हो भने भयावह उत्तर अगाडि उभिन्छ। यहाँ भने केही देशमा उब्जिएको गृहयुद्धको आगोले जन्माएका शरणार्थीको बारेमा चर्चा गरिन्छ।

भुटानी शरणार्थी

एक तथ्यांकअनुसार भुटानमा नेपाली मुलका बासिन्दाको संख्या ५१ प्रतिशत छ। उत्तरी भुटानमा डुक्पाको बाहुल्य छ भने दक्षिणी भुटानमा नेपाली भाषीको। सन् १९८७ सम्म भुटान सरकारले नेपाली भाषीमाथि कुनै भेदभाव गरेका थिएन। दशैंले राष्ट्रिय पर्वको मान्यता पाएको थियो। सम्पूर्ण भुटानमा नेपाली भाषा पढाइन्थ्यो। तर जब भुटानमा छैठौं पञ्चवर्षीय योजनाको सन् १९८७ देखि १९९२ खाका बनाईदै थियो, त्यतिबेला देशमा पश्चिमा प्रभाव परेको अड्कल काटियो। त्यही खाकाबाट नै नेपाली भाषीमाथि भेदभाव सुरु गरियो।

सन् १९५८ मा लागू भएको नागरिकता कानुन खारेज गरेर सन् १९८५ मा बनेको नागरिकता ऐनलाई प्रभावकारी तुल्याइयो। यो ऐनले नेपाली भाषीको नागरिकतालाई वैधानिकता प्रदान गर्न सकेन। फलस्वरुप नेपाली मूलका बासिन्दा आफ्नै देशमा देशविहीन हुन पुगे। सन् १९८८ मा आचारसंहिता लागू गर्न शाही विज्ञप्ति आएपछि नेपाली भाषीबीच जातीय भूकम्प गयो। त्यहाँ बस्नै नसक्ने भएपछि तिनीहरु नेपाल आएर दशकौं संघर्षपूर्ण जीवन बिताउन बाध्य भए। हजारौं शरणार्थी अहिले नेपालबाट तेस्रो देश पुनर्वासका लागि पुगेका छन् भने कति नागरिकताविहीन रहेर अहिले पनि नेपालमै दुखजिलो गरेर जीवन घिसारिरहेका छन्।

तिब्बती शरणार्थी

तिब्बतले आफूलाई स्वतन्त्र राष्ट्रका रुपमा लिएको छ। तर चीनले तिब्बतलाई आफूलाई अभिन्न अंगका रुपमा प्रयोग गरिरहेको छ। तिब्बत र चीनबिच राजनीतिक मतभेद भएपछि सन् १९५९ मार्च १० तारिखका दिन चीनले तिब्बतमाथि हमला ग-यो। तिब्बतका तात्कालीन राष्ट्राध्यक्ष चौधौं दलाई लामाले तिब्बतबाट भागेर भारतमा राजनीतिक शरण लिइरहेका छन्।

चिनियाँ सेना र दलाई लामाका सेनाको भिडन्त हुँदा थुप्रै तिब्बती भागेर विभिन्न देशमा शरण लिन पुगेका छन्। भागेर शरणार्थी जीवन बिताउनेहरु नेपाल २५ हजार, भुटान २ हजार, स्वीट्जरल्याण्ड २ हजार, भारत १ लाख, अमेरिका १५ हजार र क्यानडा ७ सय रहेका छन्। नेपालको तनहुँ, कास्की, ताप्लेजुङ, सोलु, मुस्ताङ, हुम्ला, जुम्ला, दार्चुला आदि जिल्लामा तिब्बती शरणार्थी छन्।

चक्मा शरणार्थी

सन् १९७३ को आसपासमा बंगलादेशमा शान्ति बाहिनी नामका गुरिल्लाले स्वतन्त्र राज्यको माग गर्दै हतियार उठाए। शान्ति बाहिनीले जंगल छोडेर ५५ सय वर्ग किलोमिटर स्वतन्त्र राज्यको माग गरेका थिए। त्यो विद्रोहमा ८५ सय मानिस मारिएका थिए। झण्डै ६३ हजार बंगलादेशी शरणार्थीको आवरणमा भारत प्रवेश गरे। भारतको आसाम, महाराष्ट्र, पश्चिम बंगाल, दिल्ली आदि स्थानमा चक्मा शरणार्थी रहेका छन्। धेरैजसो शरणार्थी आफ्नो देश फर्किसकेका छन्।

कुर्द शरणार्थी

इराकका तात्कालीन राष्ट्रपति सद्दाम हुसेनले कुवेतमाथि गरेको आक्रमण गलत थियो भन्दै पश्चिमी इराकका बासिन्दाले राष्ट्रपति विरुद्ध प्रदर्शन गरे। ती मानिस टर्कीस मुलका कुर्द जाति थिए। इराकी राष्ट्रपतिलाई यो कुरा सह्य नभएपछि उनले सन् १९९१ मा कुर्दमाथि सशस्त्र हमला गरे। हमला गरेको क्षेत्र इराक र टर्कीको बोर्डर नजिकैको भूभाग थियो। इराकबाट भागेर ७० हजार कुर्दहरु शरणार्थीको रुपमा टर्की पसे। टर्की बाहेक क्यानडा, अस्ट्रेलिया, डेनमार्क, स्वीडेन र नर्वेमा कुर्दले शरणार्थी जीवन बिताए।

तमिल शरणार्थी

श्रीलंकाको कुल जनसंख्याको १७ प्रतिशत जनता भारतीय मूलका तमिल छन् भने बाँकी रैथाने सिंहाली छन्। तमिल हिन्दु र सिंहाली बौद्धमार्गी हुन्। तमिलले आफूलाई सिंहाली सरकारले उपेक्षा, थिचोमिचो र भेदभाव गरेको कारण जनाई सन् १९४८ मा पहिलोपल्ट स्वतन्त्र राज्यको माग गरे। तमिलको संगठन लिबरेसन टाइगर्स अफ तमिल ईलम संसारकै दरिलो आतंकवादी संगठनको रुपमा परिचित छ। यसको नेता भेल्लु पिल्लई प्रभाकरण हुन्। सन् १९८३ मा १३ हजार योद्धा एलटीटीईसँग आवद्ध भएपछि सरकार र तमिलको भिडन्त सुरु भयो।

तात्कालीन राष्ट्रपति महिन्दा राजापाक्षेको सक्रिय नेतृत्वसँगै गृहयुद्ध समाप्तिसँगै ठूलो संख्यामा तमिल समुदायले क्यानडा र अस्ट्रेलिया पुगे। तमिलनाडुमा भारतीय मूलका श्रीलंकाली तमिल र आप्रवासी श्रीलंकाली तमिल बस्छन्। धेरै पहिला भारतमा स्थापित भएका तमिल बाहेक अधिकांश गरिबीको रेखामुनि छन्। १९औं शताब्दीभर र २० औं शताब्दीको पूर्वाद्धमा केही श्रीलंकाली तमिल विशेषगरी जाफ्ना प्रायद्वीपबाट शिक्षा, रोजगार र व्यापारको खोजीमा भारत प्रवेश गरे।

इथियोपियाली शरणार्थी

पृथक राज्य इरिट्रियाको मागरी राखी इथियोपियाभित्र ' इरिट्रियन मुक्ति योद्धा' नामको संघले सन् १९७० मा सरकारलाई चुनौती दियो। इथियोपियाली सरकार विद्रोही समूहको सशस्त्र संघर्ष भयो। युद्धबाट आक्रान्त ७६ हजार ५ सय इथियोपियाली सुडान पसे। त्यसैगरी डेढ लाख इरिट्रियाली पनि सुडान पसे। २३ वर्षसम्मको रक्तपातपूर्ण संघर्षपछि सन् १९९३ मा इथियोपियाबाट इरिटिया मुक्त भयो। अहिले सबै घर फर्किए।

कम्बोडियन शरणार्थी

पोलपोट चुनाव लडेर सन् १९७५ मा कम्बोडियाको राष्ट्रपति भए। साम्यवादी शासन स्थापनार्थ सशस्त्र संघर्षका नाममा उनले सहरका बासिन्दालाई गाउँ लखेटे। आमूल क्रान्तिको नाममा उनले सन् १९७५ देखि १९७९ सम्मको अवधिमा देशै उजाड हुने गरी झण्डै एक करोड मानिसको हत्या गरेर देशलाई शून्यको स्थितिमा पु-याए।

पोलपोटको संगठनको नाम खमेरुज हो। सन् १९७९ मा पोलपोटको हातबाट सत्ता चिप्लिएर राजकुमार नरोदम सिंहानुकको हातमा गयो। यसमा नरोदमले पश्चिमाको सहयोग लिएका थिए। नरोदमले हुनसेनसँग मिलेर सत्ता साझेदारी गरे। हुनसेनले सत्ताको बागडोर आफ्नो हातमा लिई नरोदमलाई अपदस्त गरी निर्वासनमा जान बाध्य गराए।

हुनसेन र नरोदमको फुनसीके पार्टीका समर्थक बीच झडप भयो। त्यसैले सन् १९९७ मा ४५ हजार कम्बोडियन देश छोडेर थाइल्याण्ड पुगे। हुनसेनले नरोदमलाई खमेरुजसँग मिलेर सत्ता आफ्नो हातमा पार्न षडयन्त्र गरेको आरोप लगाई अपदस्त गरेका थिए। खमेरुज माओवादीको त्यस्तो संगठन हो, जसले पोलपोटको शासनकालमा सर्वत्र आतंक मच्चाएको थियो। सन् १९९८ मा पोलपोटको मृत्यु भएपछि खमेरुजमा शिथिलता आएको थियो।

मोजाम्बिकल शरणार्थी

सन् १९७५ सम्म मोजाम्बिक पोर्चुगलको उपनिवेश थियो। स्वतन्त्रताका लागि भएको रक्तपातपूर्ण आन्दोलनपछि यो पोर्चुगलबाट स्वतन्त्र भयो। स्वतन्त्रता पछि मोजाम्बिकमा साम्यवादी शासन लागू भयो। तर अहिले बहुदलीय शासन व्यवस्था लागू भइसकेको छ। स्वतन्त्रताको युद्धपछि देशमा फ्रिलिमो सरकार, रिनाभो सरकार रिनाभो गुरिल्लाबिच राजनीतिक मतभेद उत्पन्न भएपछि दुवैतर्फबाट सशस्त्र युद्धको घोषणा भयो। १६ वर्षसम्म गृहयुद्ध कायम रह्यो। सन् १९९२ मा दुवै पक्षबिच शान्ति सम्झौता भएपछि स्थिति साम्य भएको छ। कुल जनसंख्याको १ तिहाई अर्थात १७ करोड मोजाम्बिकनले भलाबई र जाम्बियामा शरण लिएका थिए। युद्धले ग्रसित मोजाम्बिकलाई खडेरीले पनि हिर्कायो। धेरै वर्ष पानी नपर्दा ९० प्रतिशत कृषि कर्म ठप्प भए।

अफगान शरणार्थी

दुई सय वर्ष लामो राजतन्त्रात्म इतिहास भएको अफगानिस्तानमा सन् १९७३ मा राजा जाहिर शाहलाई अपदस्त गरेपछि राजतन्त्रात्मक शासन पद्धतिको अन्त्य भयो। सेनाको सहयोग लिएर जाहिरलाई अपदस्त गरेर राष्ट्रपति बनेका मोहम्मद दाउद सन् १९७८ मा मारिए। सन् १९७९ मा सोभियत संघको प्रत्यक्ष सैनिक हस्तक्षेपबाट अफगानिस्तानमा साम्यवादी सैनिक शासन लागू भयो। साम्यवादी शासनका विरोधी इस्लाम समूह (मुजाहिद्दिन) र सरकारबिच सशस्त्र संघर्षको सुरुवात भएपछि अफगानले देश छोड्न थाले। त्यसबेला त्यहाँ बाबरक करमल राष्ट्राध्यक्ष थिए।

साम्यवादी सरकारलाई पूर्व सोभियत संघले सहायता गरेको थियो। सरकार विरोधीलाई अमेरिकाले सहयोग गरेको थियो। मुजाहिद्दिनले आफ्नो संघलाई बलियो बनाउँदै लगे भने कार्यकर्तालाई पनि हतियारले सुसज्जित गराए। त्यतिन्जेलसम्म लाखौं शरणार्थीले पाकिस्तान र इरानमा शरण लिइसकेका थिए।

सन् १९८९ मा सोभियत संघका सैनिक फिर्ता भए। तिनीहरु साम्यवादी राज्यसत्ता स्थापनार्थ सन् १९७९ मा त्यहाँ पुगेका थिए। सन् १९९२ मा शासनको बागडोर मुजाहिद्दिनको हातमा प-यो। सन् १९९४ देखि तालिबान नामको कट्टरपन्थी इस्लामिक समूह देखाप-यो। यही शक्ति अहिले अफगानिस्तानको सत्तामा छ।

हुटु र टुट्सी शरणार्थी

बुरुण्डी-रुवाण्डामा हुटु र टुटसी जातका मानिस बसोबास गर्छन्। बुरुण्डीका राष्ट्रपति मेलचियरको सन् १९९३ अक्टुबर २१ को दिन हत्या भयो। हत्याको आरोप प्रत्यारोपमा हुटु र टुटसीबिच युद्ध सुरु भयो। त्यो युद्धमा सात लाख हुटुहरु मारिए। रुवाण्डा, तान्जेनिया र जायर (अहिलेको प्रजातान्त्रिक गणराज्य कंगो) मा बुरुण्डी र रुवाण्डाका बासिन्दा विस्थापित भए। ६ अप्रिल सन् १९९४ का दिन तान्जेनियाको दारुसेलमबाट सम्मेलनमा भाग लिई फर्किरहेका रुवाण्डाका राष्ट्रपति जेभेनेल हत्यारिमान र बुरुण्डीका राष्ट्रपति साइप्रियन नटार्यामाइरा रुवाण्डाको राजधानी किगालीमा मारिए।

रुवाण्डा र बुरुण्डीमा टुट्सी अल्पसंख्यक र हुटुहरु बहुसंख्यक रहेका छन्। हुटुहरुको लडाकु समूह यार्टियोटिक फ्रन्ट र टुटसीका रुवाण्डा प्याटियोटिक फ्रन्टसबिच जातीय दंगा सुरु भयो। कुल जनसंख्याको आधा जनसंख्या शरणार्थीका रुपमा विस्थापित भयो।

रोहिंज्या शरणार्थी

म्यानमारमा अल्पसंख्यक रोहिंज्या शरणार्र्थी र सरकारी सेनाबिच भएको द्वन्द्वपछि करिब दश लाख रोहिंज्या शरणार्र्थी रखाइन राज्यबाट लाखौंको संख्यामा भागेर छिमेकी मुलुक बङ्गलादेश पुगेका छन्। यसबाहेक एसियाली मुलुक मलेसिया, इन्डोनेसिया, थाइल्याण्ड, फिलिपिन्स र केही शरणार्थी नेपालमा पनि आएका छन्।

सन् २०१७ मा गरिएको सैन्य कारबाहीपछि झन्डै सात लाख ५० हजार रोहिंज्यालाई द्वन्द्वग्रस्त राखाइन राज्यबाट मुलुक छोडेर भाग्न बाध्य पारिएको आरोपमा अहिले म्यानमारले संयुक्त राष्ट्को उच्च अदालतमा नरसंहार आरोपको सामना गरिरहेको छ।

खबरहबबाट

# खेमनाथ दाहालको नयाँ कृति 'सिर्जनामा दृष्टि' लोकार्पण



काठमाडौं । साहित्यिक पत्रकार संघको आयोजनामा एक विशेष समारोहबीच स्रष्टा दाहालको भूमिकासंग्रह कृति 'सिर्जनामा दृष्टि'को लोकार्पण गरिएको छ । संघका अध्यक्ष राधेश्याम लेकालीको सभापतित्वमा भएको कार्यक्रममा प्रमुख अतिथि, वरिष्ठ इतिहासविद् प्राडा.सुरेन्द्र केसी, कृति सर्जक महाकाव्यकार खेमनाथ दाहाल, विशिष्ठ अतिथि विशिष्ठ कलाकार मदनदास श्रेष्ठ, वरिष्ठ पत्रकार एवं साहित्यकार पुरुषोत्तम दाहाल, सामालोचक प्राडा.कृष्णप्रसाद दाहाल, समीक्षक डा.यज्ञश्वर निरौला, गीतकार समाजसेवी सोभित उप्रेति, प्राडा.गोविन्दमान सिंह कार्की, उषा दाहाललगायतले उक्त कृतिको लोकार्पण गरेको थियो ।

गीतकार/निर्देशक गणेश सुवेदीले सहजीकरण गरेको कार्यक्रमको प्रमुख अतिथि प्राडा.केसीले दीप प्रज्ज्वलन गरेर समुद्धाटन गरेको थियो । समारोहमा मिलाप प्रकाशनका अध्यक्ष कृष्ण भुसालले स्वागत मन्तव्य राख्दै उनले कृति प्रकाशनका बारेमा आफ्ना कुरा राख्दै प्रकाशन संस्था जनपक्ष प्रकाशन र यसका प्रमुख साहित्यकार पुण्यप्रसाद शर्मालाई धन्यवाद दिएको थियो ।

कृतिको समीक्षात्मक टिप्पणी गर्दै डा.निरौलाले स्रष्टा दाहालको मूल विधा काव्य भए पनि उनले अन्य क्षेत्रमा त्यतिकै सशक्त रूपमा कलम चालाउँदै आएको बताए । उनले अगाडि भने, 'स्रष्टा दाहालको मूल विधा काव्य हो तर उहाँले अन्य विधामा पनि कलम चलाउँदै आउनुभएको छ । त्यसैको पछिल्लो रूप सिर्जनामा दृष्टि हो', उनले भने, 'यस कृतिले स्रष्टा दाहालको साहित्य क्षेत्रमा नयाँ परिचय स्थापित भएको छ ।' उनले कृतिमा फरक विधाका १६ पुस्तकको भूमिका यसमा समावेश भएको जानकारी दिए ।

स्रष्टा दहालले कृति कसरी प्रकाशन भयो भन्ने बारेमा आफ्नो भनाइ राख्दै यसको प्रकाशनका लागि जनपक्ष प्रकाशन सिक्किम र यससँग जोडिएका सबैमा धन्यवाद दिएको थियो । उनले आफ्नो मूल विधा काव्य नै रहेको स्वीकार गर्दै नयाँ उपन्यासको तयारीमा आफू रहेको जानकारी दिए । उनले साहित्य लेखनमा शब्दको शिल्पीले पूर्णता दिने बताए । उनले आफ्नो सानैदेखि साहित्यमा लगाव भएको बताउँदै धरान नगरपालिकामा-२०२४ मा भएको कविता प्रतियोगितमा दोस्रो प्राप्त गरेको सम्झना गरे ।

यस्तै, समालोचक प्राडा.कृष्णप्रसाद दाहालले स्रष्टा दाहालको 'स्वेतपत्र' महाकाव्यले एउटा उचाइ प्राप्त गरेको बताउँदै पाठकले उनीसँग त्यस्तै अन्य कृतिको अपेक्षा गरेको बताए । उनले भने, 'स्रष्टा दाहालले नियात्रा, उपन्यास र कवितामा आफूलाई प्रस्तुत गर्दै आएको छ । उनका सबै कृति सशक्त छन् । अझ मलाई मन परेको कृति 'स्वेतपत्र' महाकाव्य हो । यसको उचाइमा अन्य कृतिको पनि पाठकले अपेक्षा गरेका छन् ।' उनले 'सिर्जनामा दृष्टि'मा स्रष्टा दाहालले भूमिका लेखनमा कृतिलाई न्याय गरेको आफूले पाएको बताए ।

समारोहमा वरिष्ठ समालोचक प्रमोद प्रधानले स्रष्टा दाहालको व्यक्तित्व र कृतित्वका बारेमा आफू परिचित रहेको बताउँदै उनको नियात्रा 'यात्राको सिकर्नीमा'मा आफूले समीक्षा लेखेको सम्झना गर्दै उनी सधैं सक्रिय तर चर्चामा आउन नचाहने साहित्यकार रहेको आफूले पाएको बताए । प्रधानले भने 'म स्रष्टा दाहालको व्यक्तित्व र कृतित्वबाट परिचित छु । उनी निरन्तर साधानमा रहने साहित्यकार हुन् । उनको यसअघिको कृति 'अहोरात्र', 'यात्राको सिकर्नी'देखि 'स्वेतपत्र',सम्म सबै कृतिसँग परिचित छु । उनको साहित्यमा जीवन र दर्शनका साथै हाम्रो परिवेश पाइन्छ । उहाँ सक्रिय रूपमा साहित्य साधानमा तल्लिन हुनुहुन्छ र चर्चाबाट टाढा रहन मन पराउनुहुन्छ ।'

वरिष्ठ पत्रकार एवं साहित्यकार प्रा.पुरुषोत्तम दाहालले स्रष्टा दाहालसँग आफू सानोछदादेखि नै परिचित भएको बताए । प्रकाशक संस्था जनपक्ष प्रकाशनका प्रमुख पुण्यप्रसाद शर्मासँग आफ्नो वनारस भेटको सम्झना गर्दै प्रा.दाहालले नेपाली साहित्यको श्रीवृद्धिमा सिक्किम, दार्जिलिङको ठूलो योगदान रहँदै आएको बताए । उनले लोकापर्ण भएको कृति 'सिर्जनामा दृष्टि'मा रहेका भूमिकामध्ये केही आफूले अध्ययन गरेको बताउँदै स्रष्टा दाहालको लेखनमा वेजोडको कलात्मकता रहेको आफूले पाएको जिकिर गरे ।

विशिष्ठ कलाकार मदनदास श्रेष्ठले भाषा, साहित्य कला र संस्कृतिले हामीलाई जीवन्त बनाइ राख्ने बताउँदै यसको संरक्षण, सम्बर्द्धनमा सबैले आ-आफ्नो स्थानबाट भूमिका निभाउनुपर्ने धारणा राखे । स्रष्टा दाहाललाई बधाई तथा शुभकामना दिँदै उनले दाहालको सक्रियताको प्रशंसा गरे ।

प्रमुख अतिथि वरिष्ठ इतिहासविद् केसीले समसामयिक देशको परिस्थितिको चर्चा गर्दै देशमा देखिएका तमाम विकृतिलाई पनि सर्जकहरूले उजागर गर्नुपर्ने धारणा व्यक्त गरे । विभिन्न समयमा तमाम घटनाक्रमको उदाहरण दिँदै सर्जकहरूले त्यसको खबरदारी गर्नुपर्ने बताउँदै देशको राजनीतिक परिस्थिति राम्रो हुँदामात्र सबैतिर राम्रो हुन्छ, कठिन परिस्थितिमा पनि सर्जकहरू निरन्तर आफ्ना साधनामा तल्लिन रहेका छन् तर राज्यनिरीह छ । हामी सबैले आ-आफ्नो कत्वर्य पूरा गर्नुपर्छ । देशको मुख्य समस्या भनेको राइट म्यान राइट प्यालेस नहुनु हो ।' उनले भने ।

समारोहका सभापति साहित्यकार लेकालीले सर्जक दाहाललाई बधाई तथा धन्यवाद दिँदै स्रष्टा सर्जकले आफ्नो सिर्जनमा मौलिकतालाई प्राथकितमा राख्नुपर्ने धारणा राखे। उनले पछिल्लो समयमा भएका साहित्यिक गतिविधि, सम्मान र पुरस्कारको चर्चा गर्दै साहित्यिक पत्रकार संघले त्यसको समन्वय गर्दै अघि बढिरहेको जानकारी गराए । राज्यले साहित्यकार, सर्जक, साहित्यिक पत्रकारका साथै सिर्जनमा आफ्नो जीवन व्यतीत गर्नेहरूलाई उचित सम्बोधन गर्न नसकेको गुनासो गरे । सो समारोहमा सर्जक दाहललाई सम्मान गरिएको थियो । उनलाई प्रमुख अतिथि र अन्य अतिथिहरूले खादा, माला, दोसल्ला ओडाएर र टोपी पहिराएर सम्मान गरिएको थियो ।

३५६ पेजको 'सिर्जनमा दृष्टि'मा पुण्यप्रसाद शर्मा (सिक्किम)को 'विश्वका सर्वश्रेष्ठ कविताहरू', लेखनाथ पोखरेलका ' फकलीको गाउँ', मार्वल हाउसकी शालिनी र चिबे नकटो', विमला ढुंगना/निरौला (अमेरिका)को 'यात्रामा देश', वसन्त श्रेष्ठ (अमेरिका)को 'अंगालो भरिको अनुभूति', डा.डीआर उपाध्यायको 'कसुर', मिलन शाह शंकरको 'कर्ना', जनक रावलको ' खाटा बसेको घाउ', मायादेवी गुरुङ (बेलायत)को 'ऐना', अनुशाह (अमेरिकाको) 'अनुराग', गोपाल भण्डारी (अमेरिका)को ' गोपाल भण्डारीका छन्द कविताहरू', गीता अधिकारीको 'मैले पढेका ५१ पुस्तक', लक्ष्मी श्रेष्ठ 'सगरमाथाको आर्तनाद', ईश्वरीप्रसाद भुसालको 'अर्पण' र राजु सिटौला (अमेरिका) को 'जीवन मृत्यु'जस्ता १६ कृतिका भूमिका समावेश छन् । कृतिको सम्पादन रमेश दाहालले गरेको छ ।

स्रष्टा दाहालका कवितासंग्रह 'श्रद्धाञ्जलि', खण्डकाव्य 'रश्मी', काव्य ' योद्धा', कवितासंग्रह 'हावर्डको चौतारीमा', महाकाव्य 'स्वेतपत्र', कवितासंग्रह 'म त बन्दी भएको छु', नियात्रा 'यात्राको सिकिर्नी', उपन्यास 'अहोरात्र' जस्ता कृति प्रकाशित छन् । उनको मिलाप, जनमत, बगरजस्ता पत्रिकामा कभर स्टोरी प्रकाशित हुनुका साथै 'नव छायाँवादको छवि', 'खेमनाथ दाहाल : सिर्जना र मूल्यांकन', 'समालोचना वृतमा खेमनाथ दाहाल' जस्ता कृति प्रकाशित छन् ।

लोकार्पण समारोहमा साहित्यकार लेखनाथ पोखरेल, रमेश दाहाल, जनक रावल, प्रा.सविता बस्नेत, सन्तोष श्रेष्ठ, डा.बुनु दाहाल, निता श्रेष्ठ, गीता अधिकारी, मदन दाहाल, मिलन शाह शंकर, लक्ष्मीनारायण भट्टराई, सानुकाजी श्रेष्ठ, पिताम्बर आचार्य, भोला अधिकारी, तुलसी गिरी 'भावुक', सुभाष शाह शंकर, सुरेन्द्र थापालगायत व्यक्तित्वहरूको बाक्लो उपस्थिति थियो । तस्वीर : महम्मद जलिम ।

# महेन्द्र चालिसे कबा पत्रकारिता पुरस्कारबाट सञ्चारकर्मी बिडारी सम्मानित

काठमांडू पत्रकारिता क्षेत्रमा लामो समयदेखि क्रियाशील सञ्चारकर्मी जयराम बिडारी महेन्द्र चालिसे कपन बानेश्वर (कबा) साहित्यिक पत्रकारिता पुरस्कार २०८० बाट पुरस्कृत भएका छन् ।

रामहिटी बौद्ध स्थित साहित्य सदनमा कपन बानेश्वर साहित्यिक साप्ताहिक पत्रिकाको १२औं वार्षिकोत्सवका अवसरमा कार्यक्रमको आयोजना गरि सो सम्मान प्रदान गरिएको हो ।

पत्रकारिताका माध्यमबाट विशिष्ट योगदान पुर्याएबापत कबाको आयोजनामा श्रृङ्खला मासिकका प्रधानसम्पादक प्रवीण जोशीद्वारा प्रमाण पत्र,विक्रम श्रेष्ठद्वारा सास तथा महेन्द्र चालिसेद्वारा नगद राशि प्रदान गरिएको थियो । उक्त अवसरमा अन्य नौजना विशिष्ट व्यक्तित्वहरुलाई एकसाथ सम्मानित गरिएको थियो।सम्मानित हुने अन्य व्यक्तित्वहरूमा कबा विशिष्ट सम्मानबाट स्रष्टाहरु वसन्त रिजाल ,गणेश मिश्र र रुपान्जली चालिसेलाई सम्मानित गरिएको थियो । यसैगरि रमेशप्रसाद खनाललाई कबा सम्मान अर्पण गरियो भने सर्जकहरु पुरुषतर्फ डा.छायाँदत्त न्यौपाने नालाङ्ग कबा रचना पुरस्कार तथा महिलातर्फ पुष्कर प्रसाद श्यामा खरेल स्मृति नालाङ्ग कबा रचना पुरस्कार गङ्गा आचार्य सापकोटालाई प्रदान गरिएको थियो । सोही क्रममा राम आचार्य 'पुष्पप्रेमी' लाई गङ्गा लिगल कबा रचना (मोफसल)पुरस्कार ,सुशील आचार्यलाई भमरकोटे सुसेली र हेमगङ्गा (बाल) रचना पुरस्कार अनिता तामाङ बाल विकास बोर्डिङ हाइ स्कुल बुढानिलकण्ठ कक्षा १० की छात्रालाई अर्पण गरियो ।

पत्रकार बिडारी पछिल्लो दुई दशकभन्दा बढी समयदेखि सक्रिय पत्रकारिता गर्दै आएका छन् । उनले जनआकाश लगायत अन्य साप्ताहिक तथा अनलाइनका लागि समेत रिपोर्टिङ गर्दै बीमा क्षेत्रमा बिगत २७ वर्षदेखि क्रियाशील रहँदै आएका छन् ।

# वैज्ञानिकले बनाए मधुमेहलाई हराउने नयाँ औषधि

एजेन्सी । वैज्ञानिकहरूले यस्तो औषधिको आविष्कार गरेका छन् जसको सहयोगमा मधुमेहलाई पूर्ण रूपमा निर्मूल पार्न सकिन्छ । साइन्स ट्रान्सलेशनल मेडिसिन जर्नलका अनुसार यो क्रान्तिकारी औषधि थेरापीले प्यान्क्रियाजमा बिटा सेलहरू सक्रिय गरेर इन्सुलिन उत्पादनलाई ७०० प्रतिशतसम्म बढाउन सक्छ । अहिलेसम्म मधुमेहलाई उल्टाउन नसकिने विश्वास गरिन्छ तर नयाँ अनुसन्धानका अनुसार यो थेरापीबाट मधुमेहलाई उल्टाउन सकिन्छ । मुसामा यसको प्रयोग शतप्रतिशत सफल भएको छ । यदि यो मानिसमा सफल भयो भने, यो निश्चित रूपमा करोडौं मानिसहरूको लागि जीवन बचाउने छ ।

बीटा कोशिकाहरूमा क्षतिको कारण मधुमेह

वास्तवमा, यदि प्यान्क्रियाज स्वस्थ छ भने, यसको बीटा कोशिकाहरूले राम्रोसँग इन्सुलिन उत्पादन गर्छन् । तर बिटा कोशिकाहरू बिग्रिएमा इन्सुलिनको उत्पादन घट्छ । सामान्यतया बीटा कोशिकाहरू क्षतिग्रस्त हुन्छन् वा काम गर्दैनन् । त्यसैले खतरनाक प्रकारको मधुमेहबाट पीडित व्यक्तिहरूले दिनहुँ इन्सुलिन लिनुपर्छ । पछिल्ला धेरै वर्षदेखि, बिटा सेलहरू सक्रिय गर्न अनुसन्धान भइरहेको छ । केही अनुसन्धानमा, स्टेम सेलहरू पुनः विकास गर्ने र बीटा सेलहरूलाई सक्रिय गर्ने प्रविधिमा काम भइरहेको छ । तर, यी सबै अहिलेसम्म यथार्थमा परिणत भएका छैनन् । अब माउन्ट सिनाई र न्युयोर्कको सिटी अफ होपका वैज्ञानिकहरूले मुसामा औषधि उपचारको माध्यमबाट बिटा सेलहरू सक्रिय गर्ने विधि सफलतापूर्वक प्रयोग गरेका छन् ।

बीटा बिक्री मा ७०० प्रतिशत वृद्धि

नयाँ अध्ययनमा, बीटा कोशिकाहरू औषधिको माध्यमबाट शरीर भित्र स्वतः बन्न थाल्छन् । यसपछि तीन महिनाभित्र पर्याप्त मात्रामा इन्सुलिन उत्पादन हुन थाल्छ । प्रतिवेदनका अनुसार यस थेरापीमा दुईवटा औषधि छन्- हर्माइन जुन केही बोटबिरुवामा पाइने प्राकृतिक यौगिक हो र अर्को औषधि जिएलपी १ रिसेप्टर हो, जुन तौल घटाउने औषधि हो । हार्मिनले बीटा कोशिकाहरूमा म्थ्च्ज्ञ इन्जाइमलाई आराम दिन्छ । यो इन्जाइमले इन्सुलिनको उत्पादन रोक्छ । यो थेरापी टाइप १ र टाइप २ मधुमेहबाट पीडित मुसाहरूमा सफलतापूर्वक प्रयोग गरिएको छ । वैज्ञानिकहरूले क्षतिग्रस्त मानव बिटा कोशिकाहरूलाई मुसामा प्रत्यारोपण गरे र त्यसपछि यो थेरापीद्वारा खोप लगाए । अध्ययनले पत्ता लगायो कि तीन महिना भित्र बिटा सेलहरूमा ७०० प्रतिशत वृद्धि भएको थियो ।

# वर्षायामको पौष्टिक फलफूल

एजेन्सी । मनसुन सुरु भएसँगै बजारमा मौसमी फलफूल पनि प्रशस्त आउन थालेको छ । मानिसहरूले पनि यी फलफूल मन पराउँछन् । मौसमी फलफूल सबैलाई मनपर्छ, किनभने यी फलफूल मौसम अनुसार मात्रै बजारमा पाइन्छ । यी फलफूल खानमा निकै स्वादिलो हुनुका साथै शरीरका लागि पनि निकै फाइदाजनक हुन्छ । आज हामी तपाईलाई यस्ता मौसममा हुने फलफूलको बारेमा बताइरहेका छौं, जुन शरीरका लागि निकै फाइदाजनक हुन्छ । मनसुनमा यी फलफूलको सेवनले रोग प्रतिरोधात्मक क्षमता बढाउँछ ।

नासपाती एक मौसमी फल हो, जुन मनसुनमा बजारमा ठूलो परिमाणमा बिक्री हुन्छ । यो फल पेटका रोगीहरुको लागी एक रामबाण औषधि हो । मनसुनको समयमा नासपातीको सेवन धेरै गर्नुपर्छ । यदि तपाईंले दैनिक नाशपाती खानुभयो भने, यसले तपाईंको रोग प्रतिरोधात्मक क्षमता बढाउँछ र तपाईंको शरीरलाई फिट र स्वस्थ राख्छ । त्यसैले मनसुनमा नासपातीको सेवन अवश्य गर्नुपर्छ ।

मनसुनको मौसममा अनार खानु शरीरका लागि पनि निकै फाइदाजनक हुन्छ, किनभने यसमा प्रशस्त मात्रामा आइरन र भिटामिन हुन्छ । अनार खाँदा शरीरमा रगत बढाउन धेरै मद्दत गर्छ । यदि तपाई एनिमियाबाट पीडित हुनुहुन्छ भने दैनिक १ वटा अनार खानुहोस् । यसले तपाईंको रोग प्रतिरोधात्मक क्षमता बढाउन र शरीरलाई फिट राख्न पनि काम गर्छ ।

वर्षायाममा आलबखडा खानु स्वास्थ्यका लागि निकै फाइदाजनक हुन्छ । यसमा भिटामिन सी, भिटामिन के, कपर, फाइबर, पोटासियम जस्ता धेरै पोषक तत्वहरू हुन्छन् जसले शरीरमा हुने विभिन्न रोगहरूलाई निको पार्छ । साथै, यसको सेवनले हाम्रो रोग प्रतिरोधात्मक क्षमता बढाउँछ र शरीरमा संक्रमणको जोखिम हुँदैन ।

वर्षायाममा सबैभन्दा बढी बिक्री हुने यो फल वर्षायाममा बजारमा ठूलो परिमाणमा आउँछ । यो मौसमी ब्ल्याकबेरी हाम्रो स्वास्थ्यको लागि रामबाण साबित हुन्छ, किनभने यो फल मधुमेह रोगीहरूको लागि औषधीको रूपमा काम गर्दछ । यसबाहेक यसमा भिटामिन सी, फाइबर र आइरन प्रशस्त मात्रामा पाइन्छ, जुन रोग प्रतिरोधात्मक क्षमताका लागि वरदान हो ।

लिची फल खानमा स्वादिलो मात्र नभएर हाम्रो स्वास्थ्यका लागि पनि निकै फाइदाजनक हुन्छ । यसमा पाइने पोषक तत्वले हाम्रो शरीरलाई फिट राख्छ । लिची फल हाम्रो स्वास्थ्यको लागि पनि राम्रो छ । यसको सेवनले हाम्रो पाचन प्रणालीमा सुधार हुन्छ र श्वासप्रश्वासको समस्या पनि लिची खाँदा कम हुन्छ । यो फल रोग प्रतिरोधी क्षमता बढाउन पनि उपयोगी हुन्छ । त्यसैले हामीले यी मौसमी फलफूल खानुपर्छ ।

# धनीले कसरी खेल्छन् पैसाको खेल ?

अमेरिकाका लगानीकर्ता चार्ली मुकारले भनेका थिए, "मेरो लक्ष्य धनी हुनु होइन, मात्र आर्थिक स्वतन्त्रता पाउनु थियो तर म धनी हुन पुगें ।" यस भनाइका आधारमा हामीले हाम्रो लक्ष्य आर्थिक स्वतन्त्रता हो वा सुरक्षा निक्यौंल गर्नु जरुरी छ। मुकारले जस्तै आफूभित्र भएका स्वतन्त्रताको सम्भावनालाई जगाऔं । गरिब र मध्यम वर्गका हरेक व्यक्ति आर्थिक स्वतन्त्रताभन्दा सुरक्षाको खोजीमा हुन्छन् । विशेष गरेर लगानी, उद्यमशीलता तथा व्यवसायभन्दा रोजगारी र ज्यालामा बढी भरोसा मान्ने स्वभावका हुने गर्छन् ।

वास्तवमा तिनीहरु जेलाई सुरक्षित भनिरहेका छन् त्यो नै सबैभन्दा जोखिम हुने गर्छ। खासगरी नोकरीलाई जति मायाका साथ सुरक्षित ठानेका छन्, त्यो नै सबैभन्दा जोखिम हो । हाम्रा नीति, नियम र कानुनहरुलाई हेर्यो भने हामीले सुरक्षित ठानेको जागिरमा के कति जोखिम छ थाहा पाइहाल्छौं । सम्झनुहोस् तपाईले सबैभन्दा सुरक्षित ठानेको निजामती सेवा वा सरकारी संस्थानका नोकरीहरु किन असुरक्षित बन्न सक्छ ? तपाई शारीरिक वा मानसिक रुपमा अशक्त हुनु भयो भने नेपाल सरकारले के तपाईंलाई तलब दिइरहन सक्छ ? पक्कै सक्दैन । सामान्यतया ९० दिन बिना जानकारी गयल हुनुभयो भने पत्रिकामा सूचना निकालेर नोकरीबाट बिदाइको प्रक्रिया सुरु हुनेछ । अझ निजी संस्थामा त्योभन्दा कम केही दिन वा हप्तामा नै जागिर हुनेछ। तर एउटा मध्यम परिवारका मान्छे त्यसैलाई सुरक्षित ठान्छ र 'धनी बुबा गरिब बुबा' पुस्तकका लेखक रोबर्ट टी. कियोसाकीले भने जस्तै 'मुसा दौड' मा आफूलाई बाँचुन्जेल दौडाइरहन्छ। धनीहरु यसैका लागि पैसाको खेल खेल्छन् तर गरिबहरु यसलाई बुझेर व्यावसायिक प्रणाली विकास गर्नुभन्दा तलब र पदोन्नतिका लागि बढी मरिहत्ते गर्छन् ।

'द प्याराबल अफ द पाइपलाइन' मा लेखक बर्क हेजेसले दुई पात्र पाब्लो र ब्रुनोको उदाहरण प्रस्तुत गर्दै एउटा सामान्य मान्छे कसरी धनी बन्न सक्छ ? कसरी आम्दानीको प्रणाली विकास गर्न सक्छ ? र कसरी सम्पत्ति सिर्जना गर्न सक्छ ? यसले कसरी धनी बनाउन सक्छ ? भनेर प्रस्तुत गरेका छन् । खासगरी ब्रुनो र पाब्लो एउटा गाउँमा बाल्टिनमा पानी बोकेर बेच्न तल्लीन रहन्छन् तर पाब्लो हाललाई ब्रुनोले भन्दा कम आम्दानी भए तापनि सँगै गाउँदेखि खोलासम्म पाइपलाइन बिच्छ्याउन थाल्छ तर जब 'पाइपलाइन' ओच्छ्याएर सफलता मिल्छ तब दीर्घकालमा ब्रुनोको भन्दा धेरै आम्दानी पाब्लोको हुन जान्छ । अर्थात् पाब्लोबाट ऊ 'पाब्लो द पाइपलाइन बिल्डर म्यान' बन्न पुग्छ तर ब्रुनो 'बकेट क्यारियर' अर्थात् 'बकेट म्यान' नै भइरहन्छ । पाब्लो आर्थिक रुपमा स्वतन्त्र हुन पुग्छ, ऊ जाँदा वा नजाँदा, बिरामी हुँदा वा नहुँदा सबै अवस्थामा आम्दानी भइरहन्छ तर ब्रुनो आफैंले काम गर्दा मात्र आम्दानी हुन सक्ने अवस्थामा रहन्छ । सधैं 'टाइम फर मनी ट्र्याप' मा परिराख्छ ।

धनीहरु सधैं पाब्लो जस्तै पाइपलाइन बिच्छ्याउन रुचाउँछन् । उनीहरु जान्दछन् पाइपलाइन नै 'लाइफलाइन' हो । आर्थिक स्वतन्त्रताका लागि हरेकले आफ्नो आम्दानीको पाइपलाइन बनाउन आवश्यक छ । हरेक धनीसँग आफू जान चाहेको गन्तव्यको स्पष्ट मार्गचित्र हुने गर्दछ । गरिबहरु हावामा मुक्का हाने जस्तै जिन्दगीको बास्केटबलमा बिनाबास्केट 'स्कोर' गर्न खोज्छन्, अझ अगाडि बढेरभन्दा गोलपोष्टबिना नै फुटबलमा गोल गर्न रुचाउँछन्। यसले उनीहरुलाई उद्देश्यहीन र दिशाहीन यात्रामा बरालिदिन्छ तर धनीहरु सधैं स्पष्ट 'ब्लुप्रिन्ट' बोकेर आफ्नो यात्रामा लम्कने गर्दछन् । सम्पत्तिका विषयमा हामी स्पष्ट हुन आवश्यक छ ।

सिक्नका लागि काम गरौं, कमाउनका लागि होइन

धनीहरुले पनि जागिर गर्नेगर्छन् तर कहिले त्यसैबाट आर्थिक स्वतन्त्रता पाउने विश्वास गर्दैनन् । केवल अनुभव, सीप, बचत र ज्ञान लिनका लागि रोजगारी गर्ने गर्छन् । उनीहरु नोकरीसँग त्यस्तो प्रेम गर्दैनन् जुन मध्यम परिवारकाले गर्ने गर्छन्, जसको भरोसामा जीविकोपार्जन र सेवानिवृत्त कुर्न सक्छन् तर धनीहरु कहिले आफ्नो समय पैसाका लागि बर्बाद गर्न तयार रहँदैनन् । उनीहरुलाई थाहा छ समय सीमित छ तर पैसा असीमित छ । १२ महिना काम गरेर केवल आठ महिनाको मात्रै पारिश्रमिक पाइन्छ, करिब ३० प्रतिशत अर्थात् चार महिनामाथिको ज्याला पहिला कर तिरेर भुक्तानी हुने महिना वारि वा पारि जान नदिने अभियानले मानिसको समृद्धि र सम्पन्नताको ढोका ढक्ढक्याउन सक्दैन । यसैले नोकरीभन्दा थप केही गर्न आवश्यक छ ।

छुटको 'अफर'

धनीहरु पनि सेलमा खरिद गर्न रुचाउँछन् तर गरिबहरुले जस्तो दरबारमार्ग र महलहरुमा होइन । उनीहरुलाई थाहा छ, ती सेलहरुमा गरिएको खर्च कहिले फर्केर आउन सक्दैन । यसैले उनीहरु शेयर बजार, रियलस्टेट र प्रतिफलमुखी लगानीका क्षेत्रहरु जहाँ पैसा बनाउन सकिन्छ त्यस्तो स्थानमा सेल लाग्दा किन्न रुचाउँछन् । सबैभन्दा गम्भीर प्रश्न केहो भने 'वारेन्ट बफेट'ले भने जस्तै तिमी आफूलाई नचाहिने वस्तु जम्मा गरेर बस्छौं भने त्यसको बदलामा चाहिने सामान छुट्ने छ । यसैले सेलमा जानुभन्दा पहिला त्यसलाई बुझ्ने कोशिस गरौं ।

पहिला आफूलाई भुक्तान गरौं

एउटा सामान्य व्यक्ति त्यही गर्छ जो हामी गर्ने गर्छौं अर्थात् आम्दानीबाट सबैभन्दा पहिला खर्च, नपुगेमा कर्जा सापटी र त्यति गर्दा पनि पैसा नसकिएमा बल्ल आफूलाई भुक्तानी गर्ने आम मानिसको आदत हो । बेबिलानको 'सबैभन्दा धनी मानिस' पुस्तकमा लेखक जर्ज एस। क्लासनले खाली पर्स भर्ने सातवटा तरिका बताएका छन् । त्योमध्ये 'सबैभन्दा पहिला आफूलाई भुक्तान गर्नुहोस्' एक चर्चित तरिका हो ।

'हरेक बिहान १० वटा अण्डा बास्केटमा राख्नुभयो र साँझमा नौवटा मात्रै निकाल्न थाल्नुभयो भने त्यो बास्केट भरिन कति समय लाग्ला सजिलै अनुमान गर्न सकिन्छ । अर्थात् धनीहरुले १०-९० को त्यो सूत्र सिकेका छन् । यसैले सबैभन्दा पहिला जुनसुकै अवस्थामा पनि १० प्रतिशत आफूलाई भुक्तान गर्छन् अनि मात्रै बाँकी खर्च गर्ने गर्छन् ।' उनीहरु पैसालाई काममा कसरी लगाउने जान्दछन् । तर एउटा गरिब व्यक्ति आम्दानी बढेसँगै खर्च बढाउन थाल्छ, अनि खर्चलाई नियन्त्रण गर्न सक्दैन । यो नै सबैभन्दा महाभूल हो ।

धनको अनौपचारिक शिक्षा पढौं

स्कुल शिक्षा र भान्छाको टेबलमा हुने शिक्षाको तागत फरकफरक हुने गर्छ । राज्य र शिक्षा नीति नागरिकलाई आर्थिक स्वतन्त्रताभन्दा पैसाको दासत्व स्वीकार्न लगाउने प्रकृतिको छ। रोबर्ट टी कियोसाकीले भने जस्तै '९७ प्रतिशत मानिससँग भएको सम्पत्ति र तीन प्रतिशत धनीसँग भएको धनदौलत बराबर हुनुको एउटै कारण अनौपचारिक शिक्षा हो ।' उनको तर्क छ हरेक धनी व्यक्ति र सामान्य व्यक्तिले स्कूलमा लिएको शिक्षा समान छ तर उमेर बढ्दै जाँदा सम्पत्तिको मामलामा नतिजा किन फरक आउँछ ? कारण एउटै छ ती तीन प्रतिशत सम्भ्रान्त व्यक्तिले औपचारिक शिक्षाको साथ घरमा नै थप अनौपचारिक शिक्षा पाउन सफल भए । यसैको परिणाम धनको सम्बन्धमा अनौपचारिक शिक्षा पाउनेहरुले जागिरका लागि तयार पार्ने, लोकसेवाका लागि प्रोत्साहित गर्ने र पैसाको लागि मेहनत गर्न सिकाउने सीमित शिक्षा लिएकाहरुलाई काममा लगाएर आफू आर्थिक स्वतन्त्रता पाउन सफल भए ।

औपचारिक शिक्षाले हाम्रो सोच यसरी डोऱ्यायो कि दशैंको टीका लगाउँदा र जन्मोत्सव मनाउँदासमेत आफ्ना सन्ततिलाई आशीर्वाद दिँदा 'स्कूल जाऔं, राम्रो नम्बर ल्याऔं र सुरक्षित जागिर खोजौं' भन्ने गर्छौं हामीले कहिले स्वीकार गरेनौं । स्कूलमा त पैसाका बारेमा सिकाइ हुँदैन, बरु सबै समस्याको जड पैसालाई देखाइन्छ । जुनकुरा धनीहरुले बुझेर र आफ्ना सन्तानहरुलाई पलङको सिरानीमा पल्टँदै गर्दा सिकाउन र थाले तर कमजोर परिवारकाले थाहा नै पाउन सकेका छैनन् । धनको जादुका लागि औपचारिक मात्र नभई अनौपचारिक शिक्षा मूल कुरा हुन आइपुगेको छ ।

धनीहरु घाँटीमाथि लगानी गर्ने गर्छन् । तालिम, शिक्षा र प्रशिक्षण दिएर आफ्नो दिमागी कसरत गरिरहन्छन् । एउटा धनसम्बन्धी सूत्रमा अभ्यस्त भएपछि फेरि नयाँ सूत्र सिक्न थाल्छन् । उनीहरुलाई के थाहा छ भने त्यो गरीब होस् वा धनी हरेक व्यक्ति पैसा आउने काम दोहोऱ्याएर गर्ने गर्छ । गरिबहरु मान्नुहोस् बिहान मन नभए पनि एउटा सवारी चालक पैसाको लागि साधन लिएर सडकमा निस्कन्छ ।

अर्को जागिरे रातभर आफ्नो नोकरीलाई गाली गरेर पनि १० बजे कार्यालयमा पुग्न हतारिन्छ तर धनीहरु पनि पैसाका लागि एउटै काम बारम्बार गर्ने गर्छन् तर उनीहरु आफूलाई मन परेको काम गर्ने गर्छन् । यसका लागि उनीहरुमा सिक्ने क्रम तबसम्म चलिरहन्छ जबसम्म आफूमा निपूर्णता आउँदैन । उनीहरु सिक्न रमाउँछन् तर एउटा मध्यम परिवारको मानिस घाँटीभन्दा तल लगानी गर्न रुचाउँछ । आफूलाई सम्पन्न देखाउन ब्रान्डेड कपडा, जुत्ता र चस्मामा लगानी गर्छ । अझ साथी र छिमेकलाई देखाउनकै लागि ठूला घर र गाडीहरु खरिद गर्छ । कहिले फिर्ता नहुने दायित्व बनेर भरिएको पर्स रित्ताउन मात्रै लागिपर्छ । यसले प्रतिफल दिन सक्दैन जुन कुरा धनीहरुले बुझेका हुन्छन् ।

प्रतिफल छिटो हुन सक्छ तर छोटो बाटो असम्भव

आफैं अर्बपति बनेकाहरु हेनरी फोर्ड र थोमस एडिसनजस्ता दुई हजारभन्दा बढी सफल व्यक्तिका बारेमा २० वर्ष लगाएर अध्ययन गरी लेखिएको 'सोच्नुहोस् र धनी बन्नुहोस्' पुस्तकका लेखक नेपोलियन हिलले लेखेका छन्, "'गर्भे चिङ्गा' नपरेका अर्बपतिहरुले कहिले छोटो बाटोबाट आफूलाई स्थापित गर्न सकेनन् र छोटो बाटोको रुचि पनि राखेनन्, जब सफलता नजिक आएको थाहा पाए तब छिटो हुने उपाय भने खोजी गरेको देखियो ।" कैयौं छिटो सफल पनि भए ।

स्वयं वारेन्ट बफेटलाई हेर्ने हो भने जीवनको आठ दशक लगानी गरेर उनले बनाएको सम्पत्ति यदि त्यसको आधा दशक मात्रै गरेर छोडिदिएका भए के आजको यो सम्पन्नता सम्भव थियो ? अवश्य थिएन । यसैले धनीहरुले कारोबारी भएरभन्दा व्यवसाय र उद्योग नै स्थापना गरी लामो समयको अन्तरालमा शेयर बेचेर धनी भएको देखिन्छ । शेयर किनेर मात्र नभई सम्पत्ति सिर्जना र त्यसको शेयर बेचेर धनी हुन जान्नु आवश्यक छ। तर गरिबहरु आजको केही दिन वा हप्तामा लगानी गरेको दोब्बर वा कैयौं गुणा सम्पत्ति बढ्ने लोभमा लगानी गर्ने गर्छन्, त्यो लगानी र व्यवसायमा सम्भव छैन । त्यसका लागि चिङ्गा किन्नु उपयुक्त हुन्छ । यसैले बफेटले भने जस्तै 'लामो गतिमा दगुर्ने घोडामा बाजी लगाउनेहरुले कहिले हार्नु पर्दैन'। धनीहरुले त्यो जानेका हुन्छन् ।

समग्रमा धनीहरुले मानिसको दिमागमा संसार हल्लाउन आउने विचारलाई कसरी वस्तुमा परिवर्तन गर्न सकिन्छ निरन्तर सिकिरहेका हुन्छन् । नयाँ सोच विकास गर्न र विकास भएका सोचलाई धनमा बदल्न आफूलाई निरन्तर प्रशिक्षित गर्दै आएका छन् । पैसाको सिद्धान्त पढेर नभई अभ्यासबाट मात्रै सम्भव देखिन्छ । यसैले धनीहरु शून्यबाट एक हुन सम्पत्ति सिर्जनाका नयाँ खोजमा निरन्तर आफूलाई लगाइरहेको देखिन्छ । सम्पत्तिको परिभाषा फेरिएर 'टाइम इज मनी' को स्थानमा 'आइडिया इज मनी' हुन आइपुगेको छ । संसारका केही धनीलाई उदाहरणका रुपमा लिने हो भने एलन मक्सले विवाइडी इलेक्ट्रिक भेकल, जेब बेजोफले अनलाइन कारोबार अमेजन र जुकर बर्कले सामाजिक सञ्जाल फेसबुकमार्फत नयाँ सम्पत्ति सिर्जना गरेर विश्वमा राज गरिरहेका छन् । हाल एलन मक्स न्युरोलिङ्कमार्फत सम्पत्ति सिर्जना गर्न तल्लीन छन् ।

सबैभन्दा चाखलाग्दो विषय त आर्टिफिसियल इन्टेलिजेन्ट (एआई) द्रुतगतिको इन्टरनेट र रोबर्टको विकास जस्ता आधुनिक प्रविधिले गर्दा हिजो पाँच/छ दशकमा जन्मने अर्बपति अहिले दुई/तीन वर्षमा सजिलै सम्भव बनेको छ, जुन अनुसन्धान र विकासमा धनीहरु निरन्तर छन् । अर्कोतिर धनीहरु सधैं छिटोभन्दा छिटो आर्जित आय (तलब र ज्याला आदि) लाई निष्क्रिय आय (भाडा र ब्याज आदि) र पोर्टफोलियो आय (शेयर र बन्डलगायत कागजी सम्पत्ति आदि) मा रुपान्तरण गर्न सक्रिय रहने गर्छन् । उनीहरु बुझेका हुन्छन्, आर्जित आयलाई जतिछिटो बिर्सन सकिन्छ र बाँकी दुई आयको आकार र क्षेत्र बढाउन सकिन्छ । 'फाइनान्सियल इनडिपेन्डेन्सी' पुस्तकमा लेखक ग्रेन्ट सबाटियरले भने जस्तै 'जीवनमा उति चाँडो आर्थिक स्वतन्त्रता र सेवा निवृत्ति लिन सम्भव छ' । यसैले हरेक व्यक्तिले आम्दानीको पाइपलाइन, सम्पत्ति सिर्जना र आय रुपान्तरण कला जान्न, सिक्न र आफ्ना बालबालिकालाई सिकाउन थालौं । धनीले कसरी खेल्छन् पैसाको खेल ? पढेर मात्रै पुग्दैन अलिकता अगाडि बढेर आफ्नो जीवनमा अभ्यास गरेर हेरौं ।

(लेखक शेयर बजारका जानकार हुनुहुन्छ) रासस

## वर्ल्ड च्याम्पियनसिपमा नेपाललाई स्वर्ण !

काठमाडौं । काजकस्थानमा सम्पन्न भएको एघारौं अन्तर राष्ट्रिय स्ट्रेन्थ लिफ्टिङ च्याम्पियनसिपमा नेपालले स्वर्ण पदक प्राप्त गरेको छ । १५ जुलाईदेखि १९ जुलाईसम्म सञ्चालन भएको स्ट्रेन्थ लिफ्टिङ प्रतियोगिता अन्तर्गत बेन्च प्रेसतर्फ विश्वभरका खेलाडीहरूलाई पछि पार्दै केदारेश्वर मान स्थापितले स्वर्ण पदक जितेका हुन् । लामो समय खेलकुद क्षेत्रमा व्यतीत गरी मार्सल आर्टका ग्रान्ड मास्टरसमेत रहेका स्थापितले यसअघि भारतमा भएको अन्तर्राष्ट्रिय स्ट्रेन्थ लिफ्टिङ च्याम्पियनसिपमा समेत नेपालको लागि पदक जितेको थियो । यस प्रतियोगितामा नेपालबाट गएको टिमले करिब ११ वटा पदक प्राप्त गरेको समाचार छ ।

नेपालका लागि ठूलो मात्रामा पदक जित्दै राष्ट्रको इज्जतलाई संसारभर उच्च पंक्तिमा राख्न सफल भएतापनि अधिकांश खेलाडीले आफ्नै खर्चमा प्रतियोगितामा भाग लिएका हुन् जसमा राज्यको तर्फबाट कुनै सहयोग प्राप्त भएको छैन । आशा गरौं अन्तर्राष्ट्रियस्तरमा राष्ट्रिय गौरवलाई उच्च राख्दै चन्द्र सूर्य अङ्कित झण्डा फहराउने खेलाडीहरूलाई देश फर्केपछि नेपाल सरकारले न्यायपूर्ण रूपमा सम्बोधन गर्नेछ ।

## आइसीसी निर्णयले नेपालको विश्वकप यात्रा सहज

काठमाडौं - अन्तर्राष्ट्रिय क्रिकेट परिषद (आइसीसी) को सोमबार बसेको बोर्ड बैठकले महिला तथा पुरुष विश्वकपको छनोट प्रतियोगितामा गरेको परिवर्तनले नेपाललाई केही सहज हुने देखिएको छ ।

आइसीसीले सन् २०२६ मा हुने आइसीसी मेन्स टि२० विश्वकपका लागि क्षेत्रीय छनोटबाट विश्वकप पुग्ने ८ टोलीको छनोट प्रक्रियामा थोरै परिवर्तन गरेको छ । जसअनुसार अब युरोप र अफ्रिकाबाट २-२, अमेरिकाबाट १ तथा एसिया र इएपी क्षेत्रबाट कुल ३ टोली छनोट हुनेछन् ।

यसअघि एसियाबाट २ र इएपीबाट १ टोली छनोट हुने प्रावधान थियो । इस्ट एसिया प्यासिफिक (इएपी) बाट पिएनजी दाबेदार थियो भने जापान र भानुआतुले कडा प्रतिस्पर्धा दिने गरेका थिए । एसियामा नेपाल, ओमान, युएई र हङकङ दाबेदार रहने गर्दथे । अब क्षेत्रीय स्तरमा छनोट खेलेपछि अन्तिम चरण छनोट भने एकसाथ हुनेछ ।

यससँगै अब नेपालसँगै अन्य राष्ट्रले छनोटको सेमिफाइनलमा पराजित भएपनि विश्वकपमा पुग्न अर्को अवसर पाउने समीकरण बन्नेछ । यसले एसोसिएट क्षेत्रको बलियो मानिने नेपाल, यूएई र ओमान तीनै टोली एकसाथ विश्वकपमा छनोट हुने ढोका पनि खुलेको छ ।

महिलातर्फ पनि आइसीसीले विश्वकपमा सहभागी हुने टोलीको संख्या बढाएको छ । सन् २०३० को विश्वकप देखि सहभागी टोलीलाई १२ बाट १६ पुर्याइएको छ । नेपालको महिला टोलीले हालसम्म विश्वकप खेल्न सकेको छैन ।

त्यस्तै आइसीसीको बोर्ड बैठकले आफ्नो नियममा नरहेको भन्दै चिली र अमेरिकालाई १२ महिनाको समय दिएको छ । आफ्नो प्रशासन आइसीसीको नियमअनुसार नचलेको भन्दै सदस्यता कायम राख्न १२ महिनाभित्र समस्या सुल्झाउन समय दिएको हो ।

## रेन्जर्सविरुद्ध म्यानचेस्टर युनाइटेड विजयी

एजेन्सी - युरोपियन फुटबल सिजन सुरु हुनुअघिको प्रिसिजनको आफ्नो दोस्रो खेलमा म्यानचेस्टर युनाइटेड विजयी भएको छ । ग्लास्गोमा भएको खेलमा युनाइटेडले स्कटिस टोली रेन्जर्स माथि २-० को जित दर्ता गरेको हो ।

युनाइटेडका लागि अमाद डियालो र जो हुगिलले गोल गरेका हुन् । ३९औं मिनेटमा बक्सको दायाँभागबाट उत्कृष्ट फिनिस सहित डियालोले सुरुवाती गोल गरेका थिए । हुगिलले ७०औं मिनेटमा दोस्रो गोल गर्दै टोलीको जित निश्चित गरेका थिए ।

युनाइटेडका लागि केही युवा खेलाडी सहित नियमित खेलाडी गोलकिपर आन्द्रे ओनाना, एरन वान बिसाका, कासेमिरो, मेसन माउन्ट, जेडन साँन्चो लगायत सुरुवाती रोजाईमा रहेर खेलेका थिए ।

युनाइटेडले प्रिसिजनको पहिलो खेलमा नर्वेजियन टोली रोसेनबोर्गसँग पराजित भएको थियो । अब युनाइटेड थप ३ मैत्रीपूर्ण खेल खेल्न अमेरिका जानेछ । त्यहाँ युनाइटेडले आर्सनल, रियल बेटिस र लिभरपुलसँग खेल्ने तालिका छ।

अगस्ट १० मा म्यानचेस्टर सिटी विरुद्ध कम्युनिटी सिल्डका लागि प्रतिस्पर्धा गर्दै युनाइटेडको सिजनको औपचारिक सुरुवात हुनेछ । प्रिमियर लिग सिजनको पहिलो खेलमा युनाइटेडले अगस्ट १७ मा फुलहमसँग खेल्नेछ ।

## प्रदेश.......

पार्दा सम्म आश्वासन मात्र प्राप्त भएको छ । अघिल्लो पटक सोही क्षेत्रका सांसद कृष्णलाल भडेल भौतिक पूर्वाधार मन्त्री बन्न सफल भएकाले यस पटक श्रेष्ठ पनि उत्साहित नै छन् । तर पार्टीले उनलाई आश्वासन दिएपनि उनको मन्त्री पद सुनिश्चित भैसकेको छैन ।

संघीय सरकारमा भक्तपुर कांग्रेसका सभापति एवं सांसद दुर्लभ थापालाई मन्त्री पद नदिएको कारण प्रदेशमा श्रेष्ठलाई मन्त्री दिन पार्टी नेतृत्वलाई दबाब परेको श्रोत बताउँछ । भक्तपुर काँग्रेस श्रेष्ठलाई मन्त्री बनाउन लागिपरेकोले उनी मन्त्री बन्ने उच्च सम्भावना रहेको स्रोतको दावी छ । उनलाई सामाजिक विकास मन्त्रालय दिनेगरी छलफल अघि बढेको बताइएको छ । पार्टी भित्र श्रेष्ठ महामन्त्री गगन थापा निकट मानिन्छन ।

सोही प्यानलका कुन्दनराज काफ्ले पनि ससक्त दावेदार रहेकाले श्रेष्ठलाई मन्त्री बनाउन देउवा पक्षका जिल्ला सभापति दुर्लभ थापाको सक्रियता आवश्यक देखिन्छ । कांग्रेसबाट श्रेष्ठसंगै कुन्दनराज काफ्ले, श्याम बहादुर खड्का, विमल ठकुरी, मीनकृष्ण महर्जन, समिता खड्की, हरिप्रभा खड्की, सुना परियार, उर्मिला नेपाल र विनु रायमाझीलगायत मन्त्रीका आकांक्षी रहेका छन् ।

## कोरा....

टिशर्ट तथा अन्य सहयोग गर्ने कुरा आयो ।

त्यसपछि आयोजक साइकल कनेक्ट भक्तपुरका संस्थापक अध्यक्ष सुमित बालाले नेपाल इको प्यानलका प्रमुख कार्यकारी अधिकृत (सिइओ) इन्जिनियर कृष्णभक्त दुवालसमक्ष पुग्यो । त्यसपछि साथीहरुवीच सल्लाह गरियो । सल्लाह अनुसार एनजीओको सहयोग नलिने निर्णयमा पुगियो । त्यसपछि सहयोगको मेसा मिलाए उही सिइओ इन्जिनियर कृष्णभक्त दुवालले । उनले नेपाल इको प्यानलबाटै टिर्शटको वन्दोवस्त मिलाए । साथै नगरकोटस्थित फन्की हिल रिसोर्टमा गरियो ।

स्वास्थ्यप्रति सचेतना बढाउने र वातावरणमैत्री यातायातका साधनहरूको प्रयोगलाई प्रवर्द्धन गर्ने उद्देश्य राखेकोले आफूहरुले सामाजिक उतरदायित्व अन्तर्गत सहयोग गरेको इन्जिनियर दुवालले बताए । कोरा भक्तपुरले साइकलिङलाई मात्र प्रोत्साहन गर्ने होइन, भक्तपुरलाई पनि नयाँ उचाइमा पुऱ्याउने लक्ष्य राखेको छ, उनले भने, यही कारण हामीले सहयोग गरेका हौं ।

'पैदल र पेडलमैत्री शहर' भन्ने मुख्य नाराका साथ साइकल यात्रा भएको थियो । कोरा भक्तपुरमा देशका विभिन्न जिल्लाहरूका साथै विदेशबाट गरी एक हजार तीन सय साइकलिस्टहरूले सहभागिता जनाएको आयोजकले जनाएको छ । भक्तपुरलाई राष्ट्रिय तथा अन्तर्राष्ट्रिय साइकलिङ गन्तव्य बनाउने उद्देश्यले कार्यक्रम गरेको जनाइएको छ ।

सन् २०११ देखि काठमाडौंबाट शुरू भएको कोरा साइकलिङ च्यालेन्ज नेपालको २० भन्दा धेरै शहर र नेपाल बाहेक सिंगापुर, अष्ट्रेलिया, जर्मनी, अमेरिका, भारत लगायतका देशमा पनि हुने गरेको छ । नेपाली माटोबाट शुरू भएको कोरा साइकल च्यालेन्ज एक पृथक साइकलिङ कार्यक्रम हो ।

कोरा साइकलिङ च्यालेन्जको मुख्य उद्देश्य एक स्थापित साइकलिङ कार्यक्रम मार्फत राष्ट्रिय र अन्तर्राष्ट्रिय रूपमा भक्तपुरलाई चिनाउने अवसरको रूपमा लिइएको छ । कोरामा हरेक उमेर समूह र समुदायका साइकलप्रेमीहरू एक महोत्सवको रूपमा सहभागी हुने हुँदा धेरै भन्दा धेरै साइकलप्रेमीहरूसँग जोडिने अवसर पनि हो ।

कार्यक्रम विहान भक्तपुरको नपुखू (पोखरी) बाट सुरु भएको थियो । संघीय सांसद् प्रेम सुवालबाट उदघाटनपछि साइकल यात्रा सुरु भएको थियो । यात्रीहरुले नगरकोटको फन्की हिल रिसोर्टमा पुगेर खाना खाएका थिए । २५, ५०, ७५ र एक सय गरी चार वटा रुटमा यात्रा भएको थियो । यसका लागि पहिला नै सहभागीहरुले कुन रुटमा यात्रा गर्ने नाम दर्ता गराएका थिए ।

## नेमकिपा......

भूमिकाबारे कार्यक्रममा चर्चा गरिएको थियो । कार्यक्रमका सहभागीहरुले प्रत्येक वर्ष निरन्तर भक्तपुरका स्कुलहरुबाट एसइई, दस जोड दुई अनि त्यो भन्दा माथिको तहको परीक्षाफल पनि देशमै उत्कृष्टमध्येमा पर्ने भएकाले जिल्लालाई शैक्षिक हवको रुपमा विकास गर्नुपर्नेमा जोड दिइयो ।

काठमाडौंसँग जोडिएको भएर पनि निकै कम संख्यामा मात्रै काठमाडौ अनि ललितपुर जिल्लाका विद्यार्थीहरु भक्तपुरका स्कुल कलेजहरुमा पढन आउने गरेको भन्दै कार्यक्रममा सरोकारवालाहरुले कमसेकम पनि भक्तपुरका विद्यार्थीलाई भक्तपुरमै राखेर पढाउन सकिने अवस्थाको सृजना गर्नुपर्नेमा जोड दिएका थिए ।

हामीसँग भक्तपुरमा धेरै महँगो शुल्क लिने काठमाडौ वर्ल्ड स्कुल गुण्डू भक्तपुरदेखि लिएर निकै कम शुल्कमा पढाउने स्कुल कलेजहरु पनि छन्, कार्यक्रममा सवैको एकमत थियो, त्यसकारण जिल्लालाई शैक्षिक हवको रुपमा विकास गर्नुपर्छ ।

कार्यक्रममा आयोजक नेपाल प्रेस सोसाइटी सूर्यविनायक भक्तपुरका अध्यक्ष एवं पत्रकार उपेन्द्र केसीले पत्रकार वा पत्रकारितासँग सम्वन्धित संस्थाहरुले पर्दामात्रै उघारिदिने भएकाले त्यसलाई कार्यान्वयनको पाटोमा सरोकारवालाहरुको ध्यानाकर्षण गराए । उनले भक्तपुरका शैक्षिक संस्थाहरु भौतिक पूर्वाधारदेखि लिएर परीक्षाफलसम्ममा पनि उत्कृष्ट नतिजा निकाल्न सफल जिल्ला भएकोले यसलाई औपचारिक रुपमै शैक्षिक हवको जिल्ला बनाउनुपर्नेमा जोड दिए ।

जिल्लाको सूर्यविनायक नगरपालिका शिक्षा शाखाका प्रमुख रत्नबहादुर कटवालले भक्तपुर घोषित रुपमा नभए पनि अघोषित रुपमा शैक्षिक हवको जिल्ला भएको बिचार राखे । हामीकहाँ एकदम महँगो शुल्कमा सेवासुविधाकासाथ पढाउनेदेखि लिएर कम शुल्कमा गुणस्तरीय शिक्षा दिने ख्वप कलेज, ख्वप इन्जिनियरिग कलेजहरु छन्, यहाँ देशविदेशका विद्यार्थीहरु पढन आइरहेकै छन्, उनले भने, यति मात्रै होइन, नेपाल इन्जिनियरिंग कलेज दुवाकोट भक्तपुर अनि कानुनका लागि देशकै प्रख्यात काठमाडौं स्कुल अफ ल हाम्रो दुधिकोटमा छ ।

पछिल्लो एसइईको परीक्षामा पनि यो वर्ष जिल्लाबाट ६ हजार ७५ जना विद्यार्थी सहभागी भएका थिए । साथै यसअघिको एसइईमा पाँच हजार नौ सय २७ जना विद्यार्थी थिए । यो वर्षको एसइईमा देशभरिबाट ४७.४६ प्रतिशत विद्यार्थी उतीर्ण भइरहेको बेला जिल्लाको उतीर्ण प्रतिशत झण्डै दोव्वरको नजिकमा छ ।

कार्यक्रममा हिसानका जिल्ला अध्यक्ष अनिल कसपालले पछिल्लो एसइईमा पनि जिल्लाका ६ जना विद्यार्थीले चार जीपीए ल्याएको र तीमध्ये आफनै मोर्डन स्कुल दधिकोटबाट चार जीपीए ल्याउन सफल विद्यार्थी आफनै कलेज मोर्डन कलेज सल्लाघारी भक्तपुरमा व्यवस्थापन संकायमा भर्ना भई अध्ययन गरिरहेको चर्चा गरे । प्याव्सन भक्तपुरका अध्यक्ष सुरेन्द्र श्रेष्ठले दस वर्ष अगाडि नै २०७० सालमै प्याव्सन भक्तपुरका तत्कालिन अध्यक्षबाट यो अभियान थालेको स्मरण गरे । एन प्याव्सन भक्तपुरका जिल्ला अध्यक्ष सञ्जय खड्काले ख्वप कलेज देकोचाले कम शुल्कमा पढ्ने विद्यार्थी रोक्न सके पनि वढी शुल्क तिरेर पढन चाहने विद्यार्थीलाई जिल्लाका कुनै स्कुल कलेजले रोक्न नसकेको दुःख विसाए ।

इसानका अध्यक्ष प्रेमजन थापाले ख्वप विश्वविद्यालयले स्वीकृति प्राप्त गरे भक्तपुर स्वतः शैक्षिक हव वन्ने दावी गरे । भक्तपुरलाई ज्ञान विज्ञानको केन्द्र बनाउने अभियान सञ्चालन गर्दै आएको चर्चा गर्दै ख्वप विश्वविद्यालयलाई स्वीकृति प्राप्त भए जिल्ला स्वयम आफैं शैक्षिक हवको रुपमा परिचित हुने विश्वास उनले व्यक्त गरे ।

## मातृशक्तिले......

त्यस अवसरमा श्री १००८ स्वामी रमणानन्द गिरीले त्रिशक्ति एकादशी संस्कृति समाजको दर्ताको क्रममा धर्मको उद्देश्य राख्न नदिइएकामा आपत्ति जनाउनु भयो । उहाँले अष्ट मूर्तिका चर्चा गर्दै मानव शरीर आफैमा त्यस्तो मूर्ति हुने बताउनु भयो । प्रा. शिवगोपाल रिसालले आमा समान गुरु कोही नहुने भन्दै घरघरमा गुरुकुल अभियानले मातृशक्तिलाई अरु सशक्त बनाउने विश्वास गरे ।

त्रिशक्ति एकादशी संस्कृति समाजकी अध्यक्ष रीता पाण्डेको सभापत्विमा भएको कार्यक्रममा प्रा भवानीप्रसाद खतिवडाले वैदिक सनातन धर्मको सम्बन्ध मानव कल्याणसँग हुने बताए भने रामप्रसाद सुवेदीले दानको महिमाबारे चर्चा गरे ।

## मध्यपुर......

विद्यालयमा समेत स्वास्थ्यकर्मी, विद्यालय नर्स, महिला स्वास्थ्य स्वयम सेविकाहरु पुगेर जन्मेको २ दिनदेखि ५ वर्ष मुनीका बालबालिकालाई खोजी खोजी पोलियो थोपा खुवाउने नगरपालिकाका स्वास्थ्य शाखा प्रमुख श्रीकृष्ण प्रजापतिले जानकारी दिए ।

उनँले आवश्यक थप जनशक्ति वडाअध्यक्षहरुसँग समन्वय गरी वडा वडामा स्वयम् सेवकहरु तयार गरी खटाईने जानकारी दिए । अभियानका लागि दुई जनाको एउटा टोली बनाईनेछ । ती टोलीले बिहान र बेलुकी घरदैलो गरी बालबालिकाहरुलाई पोलियो थोपा खुवाईनेछ । नगरभित्रका ६ वटा अस्पतालमा समेत अभियान सञ्चालन हुनेछ । अभियानका लागि आवश्यक खोपसहितको स्वास्थ्य सामग्री जिल्ला जनस्वास्थ्य कार्यालयमा आइपुगी सकेको र मंगलवार साँझसम्म वडा वडामा वितरण गरिने जानकारी दिएको छ। यो अभियान आजबाट शनिवारसम्म चार दिन सञ्चालन हुने नगरपालिकाको स्वास्थ्य शाखाले जनाएको छ ।

नियमित खोपमा पोलियोको खोप दिइएको बालबालिकाहरुलाई पनि अभियानका क्रममा अनिवार्य पोलियो खोप दिनुपर्ने विश्व स्वास्थ्य संगठनका प्रतिनिधि डा. प्रविण पौडेलले बताए । उनले जन्मेको दुई दिनदेखि ५ वर्ष उमेर समूहका बालबालिकाहरुलाई नछुटाई खोप दिनुपर्ने जानकारी दिए । "यो खोपको कुनै साइड इफेक्ट हुँदैन । अन्य समय नियमित खोपका बेला पोलियो दिएका बालबालिकाहरुलाई पनि अभियानका क्रममा खोप दिनुपर्छ," उनले भने ।

उनले टुकुचा र बागमतीको दोभानको ढलमा पोलियो भाइरस फेला परेपनि अहिलेसम्म मानवमा पोलियो संक्रमण देखा नपरेकोले अहिले नै आत्तिनु पर्ने अवस्था नभएको स्पष्ट पारे । "ढलको पानीको भाइरस देखिनु एउटा घटना हो । यसको अर्थ कुनै न कुनै बालबालिकामा पोलियोको भाइरसले रुप परिवर्तन गरेको भन्ने पुष्टि भएको छ । तर मानव संक्रमण नदेखिएकोले आत्तिनु पर्ने अवस्था छैन," उनले भने । कार्यक्रममा नगरपालिकाका उपप्रमुख विजय कृष्ण श्रेष्ठले मानवमा संक्रमण देखिए यसले भोलीका दिनमा महामारीको रुप लिन सक्ने भएकाले अहिलेको विशेष अभियानलाई सबैले साथ सहयोग दिनुपर्नेमा जोड दिए ।

उ न ल नगरका जनप्रतिनिधिहरु पनि यो अभियानमा जोडिने बताउँदै नगरपालिकाले अभियानलाई सफल बनाउन सबै प्रकारको सहयोग प्रदान गर्ने प्रतिवद्धता व्यक्त गरे ।

## वागमतीका....

सय ६७ वटा २ कोठे भवन, १ सय ५१ वटा खेल मैदान निर्माण सम्पन्न भएको जम्कट्टेलले जानकारी दिए ।

यसैगरी ७ प्रदेश विश्व विद्यालय गठन, प्रादेशिक सडक गुरुयोजना पास, प्रदेशका १३ जिल्लाका कमजोर १३ वडामा नमूना वडा समाजवादी कार्यक्रम शुरु, प्रदेशका ५० भन्दा बढी वडामा समुदायमा आधारित एक वडा एक उत्पादन कार्यक्रम लागू, गृहणी महिला उद्यमशिलता कार्यक्रम ३५ वटा पालिकामा शुरु, चेपाङ च्युरी चमेरो संरक्षण कार्यक्रम, दलित विकास कार्यक्रम, नेपाल भाषा र तामाङ भाषालाई सरकारी कामकाजको भाषाको रुपमा लागु, कला र सँस्कृतिको संरक्षण गर्न रु ५ करोडको अक्षय कोष स्थापनालाई पनि जम्कट्टेलले उपलब्धीको रुपमा सार्वजनिक गरेको छ ।

दूध किसानलाइ प्रति लिटर दूध उत्पादनमा रु ३ अनुदान दिन पालिकाहरुलाइ अनुदान रकम विनियोजन, गौतम बुद्ध अन्तर ाष्ट्रिय क्रिकेट रंगशाला बनाउन ५३ करोड लागत साझेदारी गर्ने निर्णय, गौरिटार अन्तर्राष्ट्रिय खेलकुद स्टेडियमको निर्माण सम्पन्न हुने चरणमा पुगेको, प्रदेशका सबै प्रादेशिक अस्पतालहरुको स्तरउन्नति र भक्तपुर र हेटौंडा अस्पताललाई ३०० बेडमा स्तरउन्नति गर्नुलाई उपलब्धी भएको दावी गरिएको छ ।

यसैगरी प्रादेशिक अस्पतालका सबै जनरल बेड निःशुल्क, प्रदेश अस्पतालमा ६५ बर्ष माथिका ज्येष्ठ नागरिकको दन्त सेवा निःशुल्क, प्रदेशको काठ प्रदेशबासीलाइ सुपथ मुल्यमा दिन शुरु गरिएको, गरिब नागरिकको खरको छाना हटाउने अभियान सञ्चालन, प्रादेशिक खेलकुद प्रतियोगिता आयोजना, कर्मचारी दरबन्दी स्वीकृती, भक्तपुरको चाँगुनारायण-७ मा साँस्कृतिक औद्योगिक ग्राम र ललितपुरमा औद्योगिक ग्रामको सम्भाब्यता अध्ययन सम्पन्न भएको जनाएको छ ।

जम्कट्टेलले सरकारी भवन निर्माण गर्दा अनिवार्य सरकारी काठको प्रयोग गर्ने ब्यवस्था, सवारी साधनको ट्रयालमा उत्तीर्ण हुन ७० अंक ल्याए पुग्ने व्यवस्था, सवारी साधनको घरबाटनै अनलाईन मार्फत बिलबुक नवीकरण गर्ने ब्यवस्था, विभिन्न ऐन र नीति गरि २६ वटा पारित, वित्तीय संघीयता कार्यान्यन गर्न यो अवधिमा १४ अर्ब ९२ करोड रुपैयाँ स्थानिय तहमा हस्तान्तरण गरिएको, क्यान्सर रोग लागेका बिरामीलाइ उपचार सहुलियत स्वरुप रु १५ करोड निकासा गरिएको विषयलाई पनि उपलब्धीको रुपमा सार्वजनिक गरेको छ ।

यसैगरी संघीयता कार्यान्वयन गर्न जोड दिन ७ वटै प्रदेशका मुख्यमन्त्रीहरुको सम्मेलन आयोजना, विपद ब्यवस्थापनका लागि रु ११ करोड ४० लाख जिल्ला विपद ब्यवस्थापन कोषमा पठाइएको, बागमती लगानी दशकको घोषणा र लगानी बोर्डको निर्माण, एक विद्यालय एक नर्स कार्यक्रम बिस्तार गरि ८ सय ४८ मा. वि.मा पुर्याइएको, २७ वटा मा.वि.मा विद्यालय बस प्रदान, प्रदेशको दोस्रो आवधिक योजना निर्माण र भक्तपुर अस्पताल, नुवाकोट अस्पताल र सिन्धुली अस्पतालमा सिटि स्क्यान मेसिन खरिदको प्रवन्ध मिलाइएको जनाएको छ ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# गुरु पूर्णिमाको अवसरमा 'गुरु चरणमा' सार्वजानिक

गुरु पूर्णिमाको अवसरमा बबिना भट्टराईको भजन 'गुरु चरणमा' सार्वजानिक (भिडियो सहित)

गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।
गुरुः साक्षात् परंब्रह्म तस्मै श्रीगुरवे नमः ॥

अर्थात गुरु नै ब्रह्मा हुन्, गुरु नै विष्णु हुन् अनि गुरु भनेकै भगवान शंकर हुन् । गुरु नै हुन् साक्षात परब्रह्मा, यस्ता गुरुलाई म हार्दिक नमस्कार गर्दछु ।

संसारमा गुरु शब्दलाई ओजस्वी शब्दको रूपमा लिइन्छ । गुरु महिमाको वर्णन गर्न कुनै पनि भाषाका शब्दहरू अपूरा र अधुरा छन्, त्यो खालको महत्व रहेको छ हाम्रो समाजमा गुरुको । अन्य शब्दको तुलनामा गुरु शब्द उच्चारण गर्दा परमानन्दको अनुभूति हुन्छ । दुःख, कष्ट, समस्याले सताउँदा त्यसबाट निवृत्ति हुन विभिन्न उपाय गर्दा पनि भएन भने अन्तिम समाधानको स्रोतको रूपमा गुरुलाई सम्झने गरिन्छ । कुनै पनि समस्या तथा जड् रहस्यलाई निवारण गर्नसक्ने क्षमता योग्य सद्गुरुसँग हुने विश्वास गरिन्छ ।

हामी जुनसुकै दर्शन, धर्म सम्प्रदाय वा मूल्य मान्यतामा विश्वास राख्ने भए पनि ज्ञान र सीप ग्रहण गर्न गुरु र गुरुतत्वको महत्व हुन्छ । यो ब्रह्माण्डमा सायद ज्ञान मात्रै यस्तो वस्तु हो, जसलाई जति बाँड्यो त्यति नै बढ्छ । साना नानी बाबुहरूको हातमा कलम समाएर क ख रा सिकाउने र पढाउने गुरुआमा गुरुबाहरूले दिनु भएका ज्ञानले नै हामीले जीवनको प्रारम्भिक विवेक र चेतना पाएका हौं । अधिकांश समस्या र दुविधाहरूको निरोध नै असल गुरुको प्राप्ति र छनोटमा भर पर्छ ।

संस्कृत भाषामा 'गु'को अर्थ अन्धकार र 'रू'को अर्थ ज्योति वा प्रकाश गर्ने हो । आफ्ना शिष्यहरूलाई उज्यालो ज्ञानको शिक्षा प्रदान गरेर उनीहरूमा रहेको अन्धकाररूपी अज्ञानता हटाउने गुरु ब्रह्मा, विष्णु, महेश्वर र साक्षात परब्रह्म स्वरूप मानिन्छ । हाम्रो पूर्वीय दर्शन, हिन्दू मान्यता अनुसार संगीत लगायत ६४ कला सिकाउने, गायत्री, दीक्षामन्त्र, वेदमन्त्र दिने आचार्य, उमेर, बुद्धि, बल, अनुभवले पाका व्यक्ति पनि गुरु मानिन्छन्, पिता, माता, मामा, ससुरा, मावली बाजे, जिजुबुबा, ब्राह्मण र काका गुरुकै कोटीमा पर्छन् । विद्यार्जनका लागि पहिले २५ वर्षको उमेरसम्म ब्रह्मचार्य पालन गरेर गुरुकुलमा गई पढ्ने चलन थियो ।

पूर्वीय दर्शनहरूमा पौराणिक शिक्षा प्रणालीमा गुरु-शिष्य परम्परा र गुरुकुलहरूमा अति नै उच्चकोटीको र समान शिक्षाको व्यवस्था थियो भन्ने कुराहरूको वर्णन प्रशस्त पाइन्छ । त्रेता युगमा मर्यादापुरूषोत्तम भगवान श्री राम सहित उनका भाईहरु र द्वापर युगमा भगवान् श्री कृष्णले पनि गुरुकुलमै अध्ययन गरेको शास्त्रमा उल्लेख छ । पहिले गुरुहरू विद्वान हुनाका साथै शिष्यहरु पनि विनयी, गुरुभक्त र विद्याव्यासनी थिए । गुरुको मान्यता अरूले होइन स्वयंले प्राप्त गर्ने हो भन्ने कथन छ । गुरुहरू सत्यवादी असल आचरण भएका नैतिकवान र अभिभावकत्व ग्रहण गर्न सक्षम हुनु पर्छ भने शिष्यहरु पनि जिज्ञासु, मेहनती र अनुसाशित हुनुपर्छ ।

गुरु शब्द तथा गुरुप्रति गरिने श्रद्धाभक्ति एवं आस्था आफैमा शक्तिसम्पन्न छ । गुरु श्रद्धामा अत्यन्तै ठूलो शक्ति रहन्छ भन्ने पुष्टि एकलब्यले गरेको गुरु भक्तिको उदाहरणबाट सिक्न सकिन्छ । सद्गुरुहरूबाट निर्दिष्ट मार्गोपदेश अनुसरण गर्ने साधक तथा भक्तवत्सललाई सांसारिक जति पनि दुःख,कष्ट, अज्ञानता तथा अभावहरू छन् ती सबैबाट क्रमशः मुक्ति मिल्दै जाने विश्वास गरिन्छ ।

हिन्दु पात्रोअनुसार प्रत्येक संवत्सरको असार शुक्ल पूर्णिमाका दिनलाई गुरूपूजा, पूर्णिमा, गुरूपूर्णिमा, व्यासपूजा पूर्णिमा वा व्यास जयन्ती भनेर महान पर्वको रूपमा मनाउने गरिन्छ । यस वर्ष यो दिन श्रावण ६ गते आइतवार परेको छ । पौराणिक कालमा पराशर ऋषि र माझीपुत्री मत्स्यगन्धा (सत्यवती) बाट यसै दिन वेदव्यासको जन्म भएको, आषाढ शुक्ल पूर्णिमाकै दिन वेदव्यासले आफ्ना छोरा शुकदेवसहित ऋषिहरूलाई वेदवेदाङ्ग आदि धार्मिक ग्रन्थको दर्शन गराएको र गौतम बुद्धले पनि यसै पूर्णिमाका दिन आफ्ना शिष्यलाई पहिलो उपदेश दिएकाले यस दिनलाई महत्वपूर्ण पर्वका रूपमा मनाउने चलन परापूर्व कालदेखि नै सुरु भएको हो । बौद्ध धर्मावलम्बीहरू यस दिनलाई 'धर्मचक्र प्रवर्तन दिवस'का रूपमा समेत मनाउने गर्दछन् ।

ध्यानमूलं गुरोर्मूर्तिः पूजामूलं गुरोः पदम्।
मन्त्रमूलं गुरोर्वाक्यं मोक्षमूलं गुरोः कृपाः॥

अर्थात् ध्यानको मूल गुरुको स्वरूप हो, पूजाको मूल गुरुको चरण हो, मन्त्रको मूल गुरुको वाणी हो भने मोक्षको मूल गुरुको कृपा हो । त्यसैले गुरुको सेवा गरी गुरुबाट ज्ञानआर्जन गर्नु र जीवनलाई सफल बनाउनु नै जीवनको सार्थकता हो, जीवनको कर्म हो, धर्म हो र जीवनको सम्पूर्णता हो ।

गुरु पूर्णिमाको अवसरमा समस्त गुरुजनहरुको यिनै महत्व सहितको अत्यन्त श्रवणीय भजन 'गुरु चरणमा' बीणा भक्ति युट्व च्यानलबाट सार्वजनिक भएको छ । सुमधुर स्वरकि धनी बबिना भट्टराईको स्वर र संगीत रहेको उक्त भजन रवि उपाध्यायले लिपिवद्ध गरेका छन् भने भजनको एरेन्ज रुविन श्रेष्ठले गरेका छन् । अकेष्टिक स्टुडियोमा रेकर्ड भएको उक्त भजनको मिक्सिङ र मास्टरिङ प्रकाश मिश्रले गरेका छन् ।

गुरु पूर्णिमाको अवसरमा वीणा भक्ति आध्यात्मिक युट्व च्यानल मार्फत सार्जजानिक भएको उक्त गुरु भजन 'गुरु चरणमा' नेपाली भजनप्रेमीहरुले मन पराउने गायिका तथा संगीतकार बबिना भट्राइले विश्वास लिएकी छिन् ।

भगवान प्रति पूर्ण आस्था र विश्वास राख्ने गायिका तथा संगीतकार बबिना भट्राईका स्वर तथा संगीतमा भगवान श्री कृष्ण, भगवान श्री राम, भगवान महादेव लगायतका विभिन्न भजनहरु बीणा भक्ति युट्व च्यानलमा संग्रहित रहेका छन् । नेपाली सुगम संगीतमा पनि उनले धेरै गीत, गजलहरुमा आफ्नो सुमधुर स्वर दिएकी छिन् । गायन र संगीत मार्फत धर्म, अध्यात्म र भक्तिमा बबिना भट्राईले दिएकी योगदान विशेष प्रशंसनीय रहेको छ । आगामी दिनहरुमा पनि भजनद्धारा भगवानको भक्तिभाव र गुणगानलाई निरन्तरता दिई समाजमा अध्यात्म स्थापित गर्न प्रयास गर्ने उनी बताउँछिन् ।

# "नालापानी"को नयाँ ट्रेलर सार्वजनिक

काठमाडौं । रिमेश अधिकारी फिल्म प्रोडक्सन, वीर गोरखाली फिल्म, गङ्गा नारायण फिल्म र बिजीबी इन्टरटेन्टमेन्टको ब्यानरमा निर्माण भएको ऐतिहासिक चलचित्र 'नालापानी' साउन २५ गतेदेखि देशभर एकै साथ प्रदर्शन हुने भएको छ। यो चलचित्रको सोमबार बुढासुब्ब डिजिटलमार्फत ट्रेलर सार्बजनिक गरिएको हो ।

यस अघि साउन १८देखि देशभर यो चलचित्र प्रदर्शन गर्ने तय भएपनि एक साता पर सारेर अब साउन २५ गतेदेखि सिनेमाघरमा आउने भएको कुरा लेखक, निर्माता तथा निर्देशक रिमेश अधिकारीले जानकारी गराउनु भएको हो ।

चलचित्रको सह निर्माता गणेश कार्की, कार्यकारी निर्मातामा घनेन्द्र थपलिया, एसोसिएट निर्मातामा सपन थापा र निर्माता मनोज शाक्य हुनुहुन्छ । चलचित्रमा अर्जुन जङ्ग शाही, सन्तोष पन्त, देशभक्त खनाल, दयाराम दाहाल, पुजना प्रधान, मनोज शाक्य, विशाल पहारी, सुवास गजुरेल, अच्युत गजुरेल, हिक्मत थपलिया, जनक बर्तौला, सरिता राजोपाध्याय, गीत विष्ट, साहिना भट्टराई, गीता अधिकारी, सुवर्ण थापालगायतका कलाकारको अभिनय छ । रामशरण उप्रेतीको छायांकन, रोशन श्रेष्ठको द्वन्द्व, कविराज गहतराजको नृत्य रहेको चलचित्रमा भिएफएक्स अच्युत गजुरेल र सम्पादन विपिन मल्लको छ । लेखन रिमेश अधिकारी/कृष्ण आचार्य र निर्माता/देशक रिमेश अधिकारी हुनुहुन्छ । "नालापानी फिल्म सम्पूर्ण नेपालीको विरताको गाथा र गर्व गर्ने ईतिहास बोकेको फिल्म हो । फिल्मले नेपाली विर हरुको बहादुरिता बोल्ने छ र देश प्रेम बढाउने पुर्खाको योगदान र बलिदान बुझाउने छ । लामो समय र ठूलो लगानी खर्चिएको यो फिल्म बनाउनुको एउटै उदेश्य ईतिहास दस्तावेजीकरण गरेर आउँदा भावी पुस्तालाई ईतिहास जान्न बुझ्न सजिलो बनाइदिने छ', निर्देशक अधिकारी भन्नुहुन्छ ।

# डिज्नील्याण्डका १४ हजार कर्मचारी हड्तालमा

काठमाडौं । अमेरिकाको क्यालिफोर्नियास्थित डिज्नील्याण्डका कर्मचारीले युनियनब्यापी हड्तालमा उत्रने पक्षमा शुक्रबार मतदान गरेका छन् । यो निर्णयसँगै 'पृथ्वीको खुसी ठाउँ'का कर्मचारीले कामअनुसार पारिश्रमिक पाउनुपर्ने माग गर्दै हड्तालमा उत्रने बाटो खुलेको छ ।

लगभग १४ हजार डिज्नील्याण्ड रिसोर्ट कर्मचारीको प्रतिनिधित्व गर्ने युनियन गत अप्रिलदेखि ज्याला वृद्धि र अन्य सुविधा वृद्धिबारे माउ कम्पनी डिज्नीसँग वार्तामा छ ।

वार्ता रोकिएको छ र तनाव बढेको छ किनभने केही कर्मचारीले डिज्नीले युनियन विरोधी अभ्यासमा संलग्न भएको दाबी गरेका छन् । युनियनको विज्ञप्तिअनुसार ९९ प्रतिशत सदस्यले हडताल गर्नुपर्छ भन्ने पक्षमा मतदान गरेका छन् ।

यसले युनियन नेताहरूलाई हडताल कहिले बोलाउने, साथै यसको अवधि र सर्तबारे निर्णय गर्न अनुमति दिन्छ । यस हप्ता, डिज्नीले सोमबार र मंगलबारको लागि निर्धारित वार्ता जारी राख्न प्रतिबद्ध रहेको बताएको थियो ।

यदि वार्ता योजना अनुसार अघि बढ्यो भने, हडताल गर्न अधिकार दिने यो मतदानले युनियन सदस्यलाई वार्तामा लाभ दिने अपेक्षा गरिएको छ ।

'हड्ताल सधैं कामदारको लागि अन्तिम उपाय हो, तर यो बलियो भोटले डिज्नील्याण्डका सदस्यहरु डिज्नीको अनुचित श्रम अभ्यासको विरुद्ध खडा हुन र उनीहरु के गर्न तयार छन् भनेर इच्छुक छन् भनेर देखाउँछ' वार्ता समितिले विज्ञप्तिमा भनेको छ ।

'आजको यस्तो प्राधिकरण भोटले कम्पनीलाई हामी बलियो छौं र रणनीतिबाट विभाजित हुनेछैनौं भन्ने स्पष्ट सन्देश पठाउँछ' विज्ञप्तिमा भनिएको छ । गत वर्ष लेखक र अभिनेताले हलिउडलाई हड्ताल गरेपछि डिज्नीमा हुन लागेको यो अर्को ठूलो हड्ताल हुनेछ ।













प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web Portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स
## THIMI TIMES WEEKLY
साप्ताहिक



वर्ष १८ | अङ्क ०३ | ने.सं. ११४४ | साउन १६ गते बुधबार, २०८१ | 31 July 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/-

# प्रतिनिधिसभाको बैठक : सडक र हवाई दुर्घटनामै केन्द्रित भए सांसद



काठमाडौं। प्रतिनिधिसभाको आइतबार बसेको बैठकमा सांसदहरुले पछिल्लो समय देशमा हवाई तथा सडक दुर्घटना बढेकामा चिन्ता व्यक्त गर्दै सरकारको ध्यानाकर्षण गराएका छन् । बैठकमा आकस्मिक समयमा बोल्दै उनीहरुले जहाज र सडक दुर्घटनामा बृद्धि हुँदै गएकामा सम्बन्धित निकाय जिम्मेवार र जवाफदेही हुनुपर्ने धारणा राखेका थिए ।

यही साउन ९ गते सौर्य एयरलाइन्सको विमान त्रिभुवन विमानस्थलको धावन मार्गमा उडान भर्ने क्रममा दुर्घटना हुँदा १८ जनाको ज्यान गएको थियो भने एक जना पाइलटको सकुशल उद्धार गरिएको थियो । त्यस्तै लगातारको वर्षाको कारण गएको पहिरोले दुई बस त्रिशूली नदीले बगाउँदा ३७ यात्रु हराइरहेकोमा दुई हप्ताभन्दा बढी समय भइसक्दासमेत नभेटिएको घटनाप्रति सांसदहरुले सरकारको ध्यानाकर्षण गराएका छन् । मुलुकका विभिन्न स्थानमा बाढी र पहिरोका कारण विभिन्न स्थानमा सडक अवरुद्ध भएको र यातायात सञ्चालनमा समस्या भएको विषय पनि उनीहरुले उठाएका छन् ।

सांसद राजेन्द्र बजगाईंले पछिल्लो दुई वर्षमा सातवटा हवाई दुर्घटना भएकामा चिन्ता व्यक्त गरे । अन्तर्राष्ट्रिय नागरिक उड्डयन सङ्गठन

बाँकी पेज ७ मा

# बाढीपहिरोबाट नेपालका बालबालिका जोखिममा- युनिसेफ

काठमाडौं । संयुक्त राष्ट्रसंघ बाल कोष (युनिसेफ)ले नेपालसहित दक्षिण एसियाली मुलुकमा भारी वर्षासँगै आएको बाढी-पहिरोमा परी बालबालिका र किशोरकिशोरीहरु प्रभावित भएको भन्दै चिन्ता व्यक्त गरेको छ। युनिसेफका अनुसार प्राकृतिक प्रकोपबाट ६० लाख बालबालिका प्रभावित भएको अनुमान गरेको छ ।

मनसुन सुरु भएलगतै नेपालसहित दक्षिण एशियाका भारत, पाकिस्तान र बंगलादेशमा वर्षा, बाढी र पहिरोले विपत्ती निम्त्याएको छ । युनिसेफले विज्ञप्ति जारी गरी भनेको छ, 'हामी यी देशहरुमा ६० लाखभन्दा बढी बालबालिका र तिनीहरुको परिवारको सुरक्षा र रहन-सहनलाई लिएर चिन्तित छौं, जसको घर छैन, जो विस्थापित भएका छन् र बाँच्नका लागि संघर्ष गरिरहेका छन् ।'

युनिसेफका अनुसार वर्षातको समयमा बाढी र डुबानबाट बालबालिकाको स्वास्थ्यमा गम्भीर जोखिम सिर्जना गर्दछ। बाढी र पहिरोका कारण स्वच्छ खानेपानीको आपूर्ति प्रभावित भएको छ । दूषित पानीका कारण झाडापखाला लगायत अनेकौं प्रकारका रोग फैलिने डर हुन्छ। उनीहरुले समयमा उपचार नपाएमा बालबालिकाहरुमा पानीको कमी र कुपोषण हुन्छ ।युनिसेफका अनुसार जलवायु परिवर्तनका कारण अत्यन्त गम्भीर मौसमी घटनाहरु भइरहेका छन्,

बाँकी पेज ७ मा

# पाटुलाई पुरातात्विक पर्यटन केन्द्रको रुपमा विकास गर्ने

काठमाडौं , मधेश प्रदेशको महोत्तरी जिल्लामा जर्मन नागरिक गुड्रन कार्विन्सले फेला पारेको मध्य पाषण युगको हतियार कारखानाको विषयमा मधेश प्रदेश सरकारको ध्यानाकर्षण भएको छ । महोत्तरी जिल्लाको बर्दिबासस्थित पाटुमा रहेको यस ठाँउको थप अध्ययन गरी पुरातात्विक पर्यटन केन्द्रको रुपमा विकास गर्न गुरुयोजना बनाउने मुख्यमन्त्री सतिश कुमारसिंहले बताएका छन् । मधेश प्रदेशको होटल तथा पर्यटन व्यवसायी महासंघले यसै साता आयोजना गरेको "घुमौ मधेश, बुझौ मधेश" भन्ने कार्यक्रममा स्थलगत अनुगमनको क्रममा मुख्यमन्त्री सिंहले १० हजार वर्ष पहिला मानवको चहलपहल रहेको विषय निक्कै रोचक रहेको प्रतिक्रिया दिंदै पुरातात्विक महत्वका हिसाबले महत्वपूर्ण भएको यस ठाउँलाई संरक्षण गर्न स्थानीय सरकारलेसमेत योजना बनाउनु पर्नेमा मुख्यमन्त्री सिंहले जोड दिए ।

जर्मन नागरिक कार्विन्सले सन् १९८५ को दशकमा १० वर्ष लगाएर पाटुको अध्ययन गरेकी थिइन् । उनले रातो माटोले पुरिएको अवस्थामा हजारौं मध्य पाषण युगका हतियारहरु भेटिएपछि यो नै मध्य पाषण युगको हतियार कारखाना भएको निष्कर्ष निकालेकी थिइन् । जुन युग १० देखि १२ हजार वर्ष पहिलाको मानिन्छ ।

उनले आफ्नो किताब (प्रिहिज्टोरिक कल्चर्स इन नेपाल भोलम १ पृष्ठ २३९, सन् २००७) मा अहिलेको पाटु र रातु नदी वरपरको मानव सभ्यता भियतनामको सभ्यतासँग मिल्दोजुल्दो भएको र इण्डियन

बाँकी पेज ७ मा

# मध्यपुर थिमिका १० हजार बालबालिकाले लगाए पोलियो विरुद्धको खोप



भक्तपुर । विशेष पोलियो खोप अभियान अन्तर्गत मध्यपुर थिमिमा दुई दिनमा १० हजार ३१५ जनाले खोप लगाएका छन । नगरपालिका भित्रका ५ वर्ष मुनिका सम्पूर्ण बालबालिकालाई पोलियो खोप दिने अभियान अन्तर्गत मंगलवार र बुधवार दुई दिनमा नगरभित्रका ५ हजार ४५८ बालक र ४ हजार ८५७

बाँकी पेज ७ मा

# कमजोर शिक्षा नीतिले साम्राज्यवादी देशलाई मद्दत - अध्यक्ष बिजुक्छे




भक्तपुर । नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें कमजोर शिक्षा नीतिले साम्राज्यवादी देशलाई मद्दत पुगिरहेको बताउनुभएको छ। उहाँले नेपालको वर्तमान शिक्षाले पुँजीवादी व्यवस्थालाई टिकाइराख्न वा स्थायित्व दिन वर्तमान सहयोग गरेकोले साम्राज्यवादी देशलाई मद्दत पुगिरहेको बताउनुभएको हो ।

भक्तपुर नगरपालिकाद्वारा सञ्चालित ख्वप माध्यमिक

बाँकी पेज ७ मा

# मुस्ताङमा भेटियो नयाँ प्रजातिको चरा



काठमाडौं । मुस्ताङमा तालुधर्से अर्जुनक नामको नयाँ प्रजातिको चरा भेटिएको छ । चराविद् सञ्जय था श्रेष्ठ र शङ्कर तिवारीले उपल्लो मुस्ताङको समर क्षेत्रमा नयाँ प्रजातिको चरा फेला पारेको नेपाल पन्छीविद् सङ्घले जनाएको छ । नेपाल बर्ड रेकर्ड कमिटी (चरा अभिलेख तथा प्रमाणीकरण गर्ने समिति) का अध्यक्ष डा तुल्सी सुवेदीले श्रेष्ठ र तिवारीले उक्त तीनधर्से अर्जुनक जातको चरा नेपालमा पहिलो पटक भेटिएको विज्ञप्तिमार्फत् जानकारी दिएका छन् ।

स्पोटेड फ्लाइक्याचर (क्उयततभम ँथिअबतअजभच) अंग्रेजी नाम भएको उक्त चराको वैज्ञानिक नाम मुसिकापा स्ट्रिएटा (:गकअष्अबउब क्तचष्बतब) रहेको कमिटीका अध्यक्ष सुवेदीले जानकारी दिए ।

समुद्री सतहबाट तीन हजार छ सय ५० मिटर उचाइमा यही साउन २ गते बिहान पदयात्राका क्रममा श्रेष्ठ र तिवारीले खिचेको सो चराको तस्वीर पुष्टिका लागि नेपाल बर्ड रेकर्ड कमिटीमा पठाएका थिए ।

उपलब्ध प्रमाण, विवरण अध्ययन र राष्ट्रिय अन्तर्राष्ट्रिय पन्छीविद्सँगको सुझावका आधारमा तालुधर्से अर्जुनक भएको पुष्टि गरी नेपालमा पाइने

बाँकी पेज ७ मा

# स्वेच्छाले अलग्गै बसीरहेका आदिवासी समुदायको अधिकारको पक्षमा विश्वव्यापी बहस

कुमार यात्रु तामाङ

कुनै पनि मानव अर्को समुदायसंग सम्पर्क स्थापित नगरी जीवन निर्वाह गर्न सक्छ कि सक्दैन भन्ने बहसका बीच संयुक्त राष्ट्रसंघले 'स्वेच्छाले अलग बस्न चाहनेहरुको' पक्षमा ३० औ अन्तराष्ट्रिय आदिवासी दिवशको नारा तय गरेको छ । राष्ट्रसंघले सन् २०२४ (यस बर्ष)को आदिवासी दिवशको नारा 'स्वेच्छिक रुपमा अलग बसिरहेका र भर्खैरै सम्पर्कमा आएका आदिवासीको अधिकार संरक्षण' भन्ने नारा अगाडि सारेको हो । अन्तराष्ट्रिय आदिवासी दिवश यही ९ अगष्ट (२५ साउन, २०८१) मा मनाईदै छ ।




विश्वका ७० देशमा आफ्नै थातथलोमा फरक परम्परा, सामाजिक, साँस्कृतिक, आर्थिक तथा स्वशासनयुक्त राजनीतिक प्रणालीको अभ्यास गरिरहेका ४७ करोड जनसंख्यालाई आदिवासी भनेर सम्बोधन गरिन्छ । विश्व जनसंख्यामा उनीहरुको उपस्थिति ६.२ प्रतिशत रहेको छ भने त्यसमध्ये १९ प्रतिशतमा अति गरिबी रहेको छ । ८० प्रतिशत आदिवासीहरुमा खाद्य स्रोतमा आत्मनिर्भरता रहेको पाइन्छ । उनीहरुले करीव ५ हजार भन्दा बढी भाषाको प्रयोग गर्छन् र प्राकृतिक स्रोतको संरक्षण गर्ने काम गरिरहेका छन् । तिनै आदिवासी मध्ये

बाँकी पेज २ मा

TIMES


# प्रसिद्ध नेत्ररोग विशेषज्ञ डा. सन्दुक रुइत तथा पत्रकार चन्द्रकिशोर सम्मानित




-जयराम बिडारी

काठमाडौं । ''करले होइन रहरले धर्म गर्नुपर्छ'' भन्ने बाणीलाई अङ्गिकार गरेको कर्मयोगी बद्रीविक्रम थापा सेवा गुठीद्वारा स्वर्गीय बद्रीविक्रम थापाको १०२ औं स्मृतिसभा तथा राष्ट्रगौरव पुरस्कारका साथै सेवा पुरस्कार समर्पण कार्यक्रम सम्पन्न गरिएको छ ।

नेपाल प्रज्ञा प्रतिष्ठानमा आयोजित कार्यक्रममा गुठीका अध्यक्ष तथा काठमाडौं विश्वविद्यालयका पूर्व कुलपति प्रा.डा.सुरेशराज शर्माको अध्यक्षता तथा दिव्य शताब्दी पुरुष डा.गौरीशंकर लाल दासको प्रमुख आतिथ्यमा सम्पन्न गरिएको थियो ।

उक्त कार्यक्रममा प्रमुख अतिथि शंकरलाल दासद्वारा वरिष्ठ नेत्ररोग विशेषज्ञ डा. सन्दुक रुइतलाई दुई लाख बाइस हज़ार दुई सय बाइस नगद राशी सहित सम्मान पत्र सहित 'बद्रीविक्रम राष्ट्रगौरव पुरस्कार २०८१' ले सम्मानित गरियो । साथै सो अवसरमा 'सेवा पुरस्कार नेपाल २०८१' पत्रकार तथा स्तम्भकार चन्द्रक़िशोरलाई दुई लाख बाइस हज़ार दुई सय बाइस नगद राशी सहित सम्मान पत्रले सम्मानित गरिएको थियो । सोही अवसरमा लोकविक्रम थापाद्वारा हिन्दू विद्यापीठ नेपाल थलीका छात्र अनुप दाहाललाई 'बद्रीविक्रम चरित्र निर्माण पुरस्कार २०८१' दश हजार नगद राशी सहित प्रमाण पत्र प्रदान गरिएको थियो । साथै श्रम तथा सामाजिक सुरक्षा मन्त्री सरत् सिंह भण्डारीद्वारा चिरीकाजी महर्जनको तर्फबाट उनकी धर्मपत्नी पुनमाया महर्जन पच्चीस हजार नगद राशीको 'श्रम सम्मान तथा आर्थिक सहयोग' प्रदान गरिएको थियो ।

कार्य समिति सदस्य श्रीओम श्रेष्ठ 'रोदनद्वारा' स्वागत गरिएको उक्त कार्यक्रममा संस्थाका कोषाध्यक्ष रहेका किरण थापाद्वारा संस्थगत गतिविधिकाा बारेमा प्रकाश पारिएको थियो ।

कार्यक्रममा गुठीको मुखपत्रका रुपमा 'सेवा नेपाल २०८१' तथा कृष्णप्रसाद भट्टराई स्मृति ग्रन्थ 'किसुनजी' लोकार्पण समेत गरिएको थियो । सो अवसरमा ग्रन्थका सम्पादक समेत रहेका हरि मञ्जुश्रीद्वारा विमोचित कृतिबारे प्रकाश पार्दै निष्ठाको राजनीति गर्ने, शालिन , शौम्य, अनि रशिक स्वभावका आध्यात्मिक चिन्तकका रुपमा परिचित, अन्तरिमकालका प्रधानमन्त्री हुँदा तोकिएकै समयमै संबिधान जारी गर्न सक्षम नेपाली कांग्रेसका संस्थापक नेताका रुपमा समेत परिचित किसुनजीका विविध पक्षबारे प्रकाश पारेका थिए ।

सम्मानित व्यक्तित्व डा.सन्दुक रूइतले समाजसेवी, कर्मयोगि तथा कुशल प्रशासकका रुपमा सुप्रसिद्ध बद्रीविक्रम थापाको नाममा स्थापित गरिएको गरिमामय पुरस्कारबाट पुरस्कृत हुन पाएकोमा समाज र राष्ट्रप्रतिको जिम्मेवारी र कर्तव्य अझै बढेर गएको बताए अर्का सम्मानित व्यक्तित्व चन्द्रकिशोरले आफू किसान परिवारमा हुर्किएकोले एकपटक संयोगबस् हस्तलिखित पत्रिका कसरी प्रकाशित गर्ने तथा पत्रकारिता के हो भन्ने पुस्तक पढेपछी आफ्नो जीवनको मार्ग नै परिवर्तन भएको बताउँदै, जुन कुराले आफ्नो लेखन कर्ममा सक्रियता बढेको बताए । पत्रकारिताका क्षेत्रमा देखिने सत्ताको महिमागान र भुईंमान्छेहरुको आवाज मध्य भुईंमान्छेको आवाजलाई प्राथमिकतामा राखेर लेखनको माध्यमबाट प्रस्तुत गर्ने साहस गरिएकोले आज अग्लो ब्यक्तित्व निर्माण गरेकाहरुसंग कुम जोडेर बस्ने अवसर जुरेको उल्लेख गर्दै प्राप्त पुरस्कारले थप जिम्मेवारी बढेको महसूस गरेको बताए ।

सोही अवसरमा पूर्व मन्त्री तथा वरिष्ठ राजनीतिज्ञ नवराज सुवेदीले सम्मानित व्यक्तित्वद्वयका बैशिष्ट्य कर्मको प्रसंसा गर्दै सहि व्यक्तित्वले ठीक पुरस्कार र सम्मान प्राप्त गरेकामा सन्तोष व्यक्त गर्दै बद्रीविक्रम थापाका विविध पक्षका बारेमा प्रकाश पारेका थिए । यसैगरि कार्यक्रममा श्रममन्त्री भण्डारीले किसुनजीसँगका केही रोचक प्रसंगहरु सुनाएका थिए । कार्यक्रमका प्रमुख अतिथि रहेका डा. गौरीशंकर लाल दासले सम्मानित दुवैजना आ-आफ्ना क्षेत्रका अत्यन्त योग्य र सक्षम ब्यक्तित्व रहेको उल्लेख गर्दै त्यस्ता विशिष्ट व्यक्तित्वहरूलाई सम्मानित गर्न पाउँदा आफैँ सम्मानित भएको महसूस गरेको बताए । यसैक्रममा गुठीका अध्यक्ष प्रा.डा.सुरेशराज शर्माले आत्मप्रशंसा भन्दा पनि किशुनजी जस्तो व्यक्तित्वको बारेमा स्मृति ग्रन्थ प्रकाशित गरी सार्थक कर्म गरेकोमा साथै समाजका योग्य व्यक्तित्वको खोजी गरी पुरस्कृत गर्न पाएकोमाा सन्तोष व्यक्त गरे ।

साहित्यकार तथा पत्रकार राजेश खनालद्वारा सञ्चालन गरिएको उक्त कार्यक्रम सभ्य एवं भव्य रुपमा सम्पन्न गरिएको थियो ।

# नेपालमा कोदो मात्रै बर्सेनि ७५ करोडको आयात



काठमाडौं । कोदो नेपालको रैथाने खाद्य बालीको रुपमा चिनिन्छ । प्रत्येक वर्षको साउन १५ मा नेपालका विभिन्न ठाउँमा ' कोदो दिवस' अनौपचारिक रूपमा मनाउने गरिन्छ । कोदो रोप्ने मुख्य सिजन साउन भएकाले अनौपचारिक रूपमा १५ साउनलाई कोदो दिवसका रूपमा मनाउँदै आएको कृषि मन्त्रालयले जनाएको छ ।

देशको सबै जिल्लामा कोदो खेती गरिएको पाइए पनि यो उत्पादनका हिसाबले अत्यन्तै कम छ । नेपालमा सबैभन्दा धेरै खेती हुने जिल्ला खोटाङ, सिन्धुपाल्चोक, बाग्लुङ, स्याङ्जा, कास्की, ओखलढुंगा, गोरखा र सिन्धुली हुन् ।

कोदो कम वर्षा हुने, कम उर्वर भूमि, सिञ्चित र असिञ्चित दुवै अवस्थामा उब्जिन सक्ने भएकाले यसको व्यावसायिक उत्पादन भने हुन नसकेको कृषि मन्त्रालयका अधिकारीहरू स्विकार्छन् ।

तर, कोदो नेपालको रैथानै बाली भनिरहँदा नेपालले करोडौंको आयात गरेको तथ्यांक भेटिन्छ । भन्सार कार्यालयको तथ्यांक अनुसार गत आर्थिक वर्ष २०८०/८१ मा मात्रै १ करोड ५२ लाख ९२ हजार किलो अर्थात् ७५ करोड ४१ लाख रुपैयाँको कोदो आयात भएको छ ।

यस्तै कोदोको बिउ २ लाख २८ हजार रुपैयाँ बराबर आयात भएको छ । यसो त नेपालले कोदो आयात मात्रै नभई निर्यात पनि गर्छ, तर थोरै मात्रामा । गत आवमा नेपालले आठ देशमा कोदोको बिउ निर्यात गरेको थियो । यसले नेपाली कोदोको बिउ अस्ट्रेलिया, हङकङ, जापान, क्यानडा, इटाली, कोरिया, अमेरिका, वेलायतमा निर्यात भएको देखिन्छ । जसमा सबैभन्दा धेरै दक्षिण कोरियामा २८ लाख ६५ हजार रुपैयाँ बराबर निर्यात भएको छ । यस्तै अस्ट्रेलिया, हङकङ र कोरियामा पनि थोरै कोदो निर्यात गरेको देखिन्छ ।

कृषि मन्त्रालयका एक अधिकारीका अनुसार यसरी कोदो निर्यात हुनु नेपाली बिउको विश्व बजारमा माग रहेकाले नमुनाका रूपमा गइरहेको बताउँछन् । 'हाम्रो रैथाने बिउलाई धेरै देशले परीक्षण गर्न लगेको पनि देखिन्छ, अर्को चाहिँ नेपालीहरू धेरै रहेको देशमा त्यहाँका स्थानीय पसलेहरूले पनि लगेका हुन्, व्यावसायिक रूपमा कोदो खासै निर्यात हुँदैन,' उनले भने ।

कृषि अर्थशास्त्री अभिनाश सिलवाल नेपालमा रैथानै बाली ब्रान्डिङ गर्न ढिला हुँदा कोदो आयात गर्नुपर्ने अवस्था आएको बताउँछन् । 'हाम्रो सरकार र किसान दुवैको फोकस नगदे बाली र तरकारीमा मात्रै भयो, तर संसारभरि नै हुने कुरामा फोकस गरिएन, कोदो-फापरमा ध्यान दिइएन यसको असर हो करोडौंका आयात हुनु,' सिलवालले भने ।

उनले बेलैमा नेपालमा कोदो खेतीलाई ब्रान्डिङ गरेर उत्पादन नलिए केही समयपछि नेपालको रैथाने भन्ने अस्तित्व नै नरहने बताए । नेपालको बिउ विदेश गइरहनुलाई उनले कोदोको महत्त्व संसारभरि हुँदा नेपालले मार्केटिङ गर्न नजानेको बताए ।

बाली विकास तथा कृषि जैविक विविधता संरक्षण केन्द्रका अनुसार वैज्ञानिक भाषामा कोदो, चिनो, कागुनो, जुनेलो, बाजरा, साँवालगायत बाली सबै कोदो वर्गमा पर्दछन् । तर, नेपाली भाषामा कोदो भन्नाले मसिना गोलाकार दाना हुने घाँसे परिवार अन्तर्गत पर्ने परम्परागत अन्नबाली बुझिन्छ ।

नेपालमा खेती हुने कृषकका स्थानीय जातमा अरुण कोदो, भदौरे कोदो, बौलाहा कोदो, चरिकोटे कोदो, चुल्ठे कोदो, च्याल्से कोदो, च्याल्ठे कोदो, डल्ले कोदो, डल्ले सेतो, डुँडे कोदो, दूधे कोदो, झुप्पे कोदो, कालो बुंगे, कालो कोदो, कात्तिके कोदो, कात्तिके डल्ले, किर्ने कोदो लगायत ५० भन्दा बढी छन् । त्यस्तै उन्नत जातमा ओख्ले-१, डल्ले-१, काब्रे कोदो-१, काब्रे कोदो-२, शैलुङ कोदो-१ छन् ।

केन्द्रले निकालेको एक प्रकाशन अनुसार देशको कुल खाद्यान्न बाली क्षेत्रफलको ७.७ प्रतिशत हिस्सा ओगट्ने कोदोले कूल क्षेत्रफलको ९५ प्रतिशत पहाडी भेगमा मात्रै पर्छ । नेपालको तराइदेखि समुद्र सतहबाट ३ हजार १ सय मिटरसम्मका उच्च पहाडी क्षेत्रसम्म कोदो खेती गरिने गरेको उक्त प्रकाशनमा उल्लेख छ ।

परम्परागत रूपमा कोदो मुख्यतः ढिँडो, रोटी, रक्सी र पशु आहारामा प्रयोग हुने गरेको पाइन्छ । यसको ढिँडो कडा परिश्रम गर्ने श्रमजीवीको पहिलो रोजाइको खाना हो ।

नेपालका आदिवासी जनजाति समुदायमा कोदोको सांस्कृतिक महत्त्व पनि रहेको छ । चाडपर्व तथा पूजाआजामा कोदोको रक्सी चढाउने तथा अतिथि सत्कारमा समेत प्रयोग हुने गर्छ । खेती गर्न सजिलो हुनुका साथै कोदो ज्यादै पौष्टिक खाद्यान्न हो ।

केन्द्रका अनुसार पौष्टिक खाद्यतत्वका हिसाबले अन्य बालीभन्दा कोदोलाई उच्च स्थान दिन सकिन्छ । कोदोमा चामल र मकैमाभन्दा ३५ गुणा र गहुँभन्दा ८.८ गुणा बढी क्याल्सियम पाइन्छ । त्यस्तै चामलभन्दा २.३ गुणा, मकैभन्दा ३.७ गुणा र गहुँभन्दा १.५ गुणा बढी फलाम पाइन्छ ।

१ सय ग्राम कोदोबाट औसतमा ७६.३ ग्राम कार्बोहाइड्रेड, ९.२ ग्राम प्रोटिन, २.२ ग्राम खरानी, १.४ ग्राम चिल्लो, ३.५ ग्राम रेशा, ३ सय ६० मिलिग्राम क्याल्सियम, २ सय ५४ मिलिग्राम फस्फोरस, ७.४ मिलिग्राम फलाम र ३ सय ३३ क्यालोरी ऊर्जा प्राप्त हुन्छ । कोदोमा पाइने प्रोटिनमा दूधमा जस्तै मिथायोनिन र सल्फरयुक्त एमिनो एसिड पाइन्छ ।

# विश्वका ती पाँच ठूला विमान दुर्घटनामा कहिले ५८३ र कहिले ३२९ जनाको मृत्यु



काठमाडौं । गत साउन ९ गते काठमाडौंबाट पोखरा उड्ने क्रममा सौर्य एयरलाइन्सको विमान धावन मार्गबाट केही पर दुर्घटना भएको छ । दुर्घटना हुँदा विमानमा चालक दलका सदस्यसहित १९ जना सवार थिए । दुर्घटनामा १८ यात्रुले ज्यान गुमाएका छन् भने विमानका पाइलट गम्भीर घाइते भएका र उनको अवस्था सामान्य रहेको अस्पताल स्रोतले बताइएको छ । विमान दुर्घटनाको कुरा गर्दा विगत ५४ वर्षमा ११ हजार ७८८ विमान दुर्घटनाग्रस्त भएका छन्, जसमा ८५ हजारभन्दा बढी यात्रुले ज्यान गुमाएका छन् ।

संसारको सबैभन्दा ठूलो विमान दुर्घटनाको बारेमा कुरा गर्दा, यो दुर्घटना मार्च २७, १९८८ मा लस रोडियोस एयरपोर्टमा भएको थियो । यस दुर्घटनामा पान एयर र केएलएम एयरलाइन्सका विमानहरू एक आपसमा ठोक्किएका थिए । यस दुर्घटनामा कुल ५८३ यात्रु र चालक दलको मृत्यु भएको थियो, विश्वको सबैभन्दा खराब दुर्घटना मध्ये एक, जसमा केएलएम का २३४ यात्रु र १४ चालक दलका सदस्यहरू छन् । यस दुर्घटनामा पानका ३९६ यात्रुमध्ये ३ सय ३५ जनाको मृत्यु भएको थियो ।

पहाडमा विमान ठोक्किदा, ५२० जनाको ज्यान गयो

विश्वको दोस्रो ठूलो दुर्घटना अगस्ट १२, १९८५ मा टोकियोबाट १०० किलोमिटर टाढा भएको थियो । यो दुर्घटनामा जापान एयरलाइन्सको फ्लाइट १२३ टोकियोबाट ओसाकाका लागि उडेको थियो । टेकअफ गरेको करिब ३२ मिनेटपछि विमान ताकामगहरा हिमालसँग ठोक्किएको थियो । उक्त दुर्घटनामा विमानमा सवार ५२० जनाको मृत्यु भएको थियो, जसमा ५०९ यात्रु र १५ उडान चालक दलका सदस्य थिए । यो विमान दुर्घटना अहिलेसम्मकै सबैभन्दा ठूलो दुर्घटना हो, जसमा विमानमा सबैभन्दा बढी यात्रुले ज्यान गुमाएका छन् ।

आकाशमै दुई विमान ठोक्किएर ३४९ जनाको ज्यान गयो

विश्वको तेस्रो ठूलो विमान दुर्घटना दिल्लीको चरखी दादरीमा भएको थियो । १२ नोभेम्बर १९९६ मा भएको उक्त दुर्घटनामा चिमकेन्टबाट दिल्ली आउँदै गरेको कजाकस्तान एयरलाइन्सको फ्लाइट १९०७ र दिल्लीबाट धरान जाँदै गरेको साउदी एयरलाइन्सको ७६३ नम्बरको फ्लाइट एक आपसमा ठोक्किएका थिए । यस दुर्घटनामा ३४९ जनाको मृत्यु भएको थियो । यो हवाई दुर्घटना हावामा भएको सबैभन्दा खतरनाक दुर्घटना हो । उक्त दुर्घटनामा विमानमा सवार एक जना पनि यात्रु बाँच्न सकेनन् ।

पेरिस नजिकैको जंगलमा विमान दुर्घटना, ३४६ जनाको मृत्यु

टर्किस एयरलाइन्स विश्वको चौथो ठूलो दुर्घटनामा परेको छ । टर्की एयरलाइन्सको फ्लाइट ९८१ ओर्ली एयरपोर्टबाट लन्डनको लागि उडेको थियो । उडान भरेको केही समयपछि विमानको कार्गो गेट विमानबाट अलग भयो, जसका कारण ठूलो विष्फोट भयो । यसपछि विमानको माथिल्लो तला खसेको थियो । केही समय पछि, विमान डाइभिङ गर्ने क्रममा पेरिसको उत्तर-पूर्वी जङ्गलमा दुर्घटनाग्रस्त भयो । उक्त दुर्घटनामा विमानमा सवार सबै ३ सय ४६ यात्रुको मृत्यु भएको थियो ।

आयरल्याण्डमा एयर इन्डियाको विमान दुर्घटना, ३२९ जनाको मृत्यु

विश्वको सबैभन्दा ठूलो दुर्घटना भारतको एयर इन्डियासँग सम्बन्धित छ । जुन २३, १९८५ मा, एयर इन्डियाको फ्लाइट १८२ टोरन्टोबाट उडेको थियो । यो उडान मोन्ट्रियलबाट लन्डन हुँदै दिल्ली पुग्ने थियो । आयरल्याण्डको दक्षिण-पश्चिम तट नजिकै विमानको कार्गोमा अचानक ठूलो विस्फोट भयो र विमान दुर्घटनाग्रस्त भयो । यस दुर्घटनामा विमानमा रहेका सबै ३०७ यात्रु र २२ चालक दलका सदस्यको मृत्यु भएको थियो ।

# माओवादी शान्ति प्रक्रियामा आएको झण्डै १९ वर्षमा ५ वर्ष सत्ता बाहिर




काठमाडौँ । पार्टी केन्द्रीय कार्यालय पेरिसडाँडामा चार दिनदेखि जारी माओवादी केन्द्रको पदाधिकारी बैठकमा नेताहरूले पहिलो पटक दिल खुलेर बहस गरेका छन् । अहिलेको परिस्थितिमा विचारको विकास र पार्टी निर्माणबारे सबै नेताहरूले समय लिएरै आ-आफ्ना धारणा राखे ।

कांग्रेस-एमालेबिच भएको ७ बुँदे सहमतिले सत्ताच्यूत हुन पुगेका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले पहिलो पटक सबैको कुरा ध्यानपूर्वक सुनेको नेताहरूले अनुभूति गरेका छन् । सोमबार सबै पदाधिकारीले आ-आफ्ना धारणा राखेपछि अध्यक्ष प्रचण्डले बैठकमा उठेका प्रश्नको जवाफ दिने बताइएको छ ।

यो समाचार तयार पार्दासम्म पार्टी प्रवक्ता अग्निप्रसाद सापकोटाले मंगलबार पार्टीको भावी योजनाको प्रारुप तयार हुनेजानकारी दिए । उनका अनुसार पदाधिकारी बैठकले स्थायी समिति बैठक बोलाउने छ । स्थायी समिति बैठकले आगामी केन्द्रीय समितिको एजेण्डा तय गर्नेछ र त्यसैले पार्टीले नयाँ योजना ल्याउने प्रवक्ता सापकोटाले दाबी गरे ।

'पार्टीभित्र अहिले विचारको विकास र पार्टी निर्माणबारे वृहङ्गम छलफल भएको छ । विचार संश्लेषणका आधारमा पार्टीको भावी योजना बन्नेछ । कसरी जाने भन्ने विषयमा बैठकले निर्देशन दिनेछ', उनले भने ।

पार्टीका सचिव राम कार्कीले कम्युनिस्ट पार्टीमा ओरालो लागेपछि चेत खुल्ने गरेको उदारहण प्रस्तुत गरेका थिए । उनले शान्ति प्रक्रियामा आएपछि पार्टी सत्तामुखी हुँदा नेताहरूको सुझाव नेतृत्वले नसुन्दा समस्या आएको निष्कर्ष निकाल्दै अहिले कम्तीमा खुला बहस भएकोमा खुसी व्यक्त गरेका थिए ।

आइतबारको बैठकमा डेढ घण्टा बोलेका उपमहासचिव जनार्दन शर्माले माओवादी इतिहासदेखि अहिलेको अवस्थासम्म उठान र बैठानबारे आफ्नो धारणा राखेका थिए । साथै उनले आफ्नो कुरा नेतृत्वले नसुनेकोमा गुनासो पोखेका थिए । सचिव गणेश साहले अध्यक्ष प्रचण्डलाई मुख्य नेतृत्वको भूमिका लिन पनि नसकेको भन्दै आगामी दिनमा लिन शुभकामना दिएका थिए । साथै उनले 'अध्यक्ष प्रचण्डले धेरै बोलिसक्नुभयो । अब कम बोल्नुहोला' भन्दै धेरै लेखपढ गर्न र अरूको कुरा सुन्नसुझाव दिएका थिए ।

चार दिनको बहसले पार्टीलाई फेरि नयाँ उचाइमा पुऱ्याउन सकिने उपमहासचिव हरिबोल गजुरेलको आत्मविश्वास छ । षड्यन्त्रमुलक ढङ्गबाट कांग्रेस-एमालेले माओवादीलाई सत्ताच्यूत गरे पनि प्रकारान्तरमा यसले पार्टी बनाउन अवसर मिलेको निष्कर्ष उनले निकाले ।

यता पहिलो दिनमै आफ्ना धारणा राखेका अर्का सचिव चक्रपाणि खनालले माओवादी शान्ति प्रक्रियामा आएको झण्डै १९ वर्षमा १४ वर्ष सत्तामा रहेको भन्दै यस बिचमा पार्टी कहाँ चुक्यो भन्ने विषयमा पनि प्रश्न आएको स्वीकारे । साथै आगामी दिनमा सदनदेखि सडकसम्म पार्टीलाई कसरी प्रभावकारी बनाउने भन्ने विषयमा बहस केन्द्रित भएको उनको भनाइ छ ।

यसै विषयमा बैठकको अन्तिममा आफ्ना भनाइ राखेका उपमहासचिव गजुरेल र सुरुमै आफ्ना विचार राखेका सचिव खनालको अनुभूति जस्ताको तस्तै राखिएको छ । प्रस्तुत छ, गजुरेल र खनालले दिएको विचारको सम्पादित अंश:

**अहिले विचार निर्माण नै मुख्य कुरा हो : हरिबोल गजुरेल**

पछिल्लो घटनाक्रमबारे सबै नेताहरूले आ-आफ्ना धारणा राखेका छन् । भावी दिनमा पार्टीलाई कस्तो बनाउने ? रणनीति र कार्यनीति कस्तो बनाउने ? कसरी जाने ? नेताहरूको रुपान्तरण कसरी गर्ने ? लगायत विषयमा उजागर गर्ने काम भयो । नेताहरूको कार्यशैली, आचरण, गुटबन्दीका विषयमा केही प्रश्न उठेका छन् ।

षड्यन्त्रकारी ढङ्गले सरकार परिवर्तन गरियो, त्यो राम्रो होइन । यद्यपि सकारात्मक ढङ्गले पार्टीलाई अगाडि बढाउने राम्रो अवसर हो । माओवादीलाई एउटा अवसर आएको छ । माओवादीले ठिक ढङ्गले ट्याकल गर्यो भने ठुलो अवसर हो ।

बैठकमा सबैले मनमा लागेका कुरा भन्न पाए । अध्यक्षले कुरा सुन्नुभयो । हिजो सम्भव थिएन । लिडरशीपले पनि धक्का खाएका छन् । पार्टीले पनि धक्का खाएको छ, खाइन्छ पनि । धक्का खाएपछि आखिर चेतना आउँछ । अब माओवादीका लागि यो टर्निङ प्वाइन्ट हुन सक्छ । छलफलबाट सही निष्कर्ष निकाले आवेश र उत्तेजनामा नआई काम गरे अवसर आउन सक्छ । अध्यक्ष प्रचण्डले संसदमा बोलेको अभिव्यक्तिले राम्रो सन्देश दिएको छ । अहिले विचार निर्माण नै मुख्य कुरा हो । विचार र राजनीति ठिक भएपछि अन्य कुरा ठिक हुँदै जान्छ । कार्यशैली आचरण त्यसैमा भर पर्छ । त्यसमा मेहनत गर्नुपर्छ ।

**प्रतिपक्षमा पुग्दा खुसी भएको भन्ने कुरा विल्कुल सही होइन : चक्रपाणि खनाल**

बैठकमा सरकारबाट हट्नुपर्नाको कारण, सदन, सडकबाट पार्टीलाई कसरी प्रभावकारी बनाउने ? सत्ता बाहिर रहेको अवस्थामा प्रतिपक्षको भूमिका कसरी निर्वाह गर्ने भन्ने कोणबाट विचार आएका छन् । अहिले नै यही कार्यक्रम बनाउने भन्दा पनि सत्ता पक्षको ७ बुँदे र संविधान संशोधनको विषयलाई हेरेर त्यही अनुसार जाउँ भन्नेमा छलफल केन्द्रित भएको छ ।

एमालेसँग कुन आधारमा एलान्स भएको थियो भन्ने विषयमा मोटामोटी कुरा उठेको छ । यसबारे अध्यक्षले जवाफ दिनुहोला । त्यतिबेला अध्यक्ष नै बढी जिम्मेवार भएको हुनाले कांग्रेससँग तोड्ने स्थिति के थियो ? उनले बलियो कम्युनिस्ट पार्टी निर्माण गर्ने भनेको थियो । भित्री कुरा केही भए गर्नुपर्ने फेरि भन्नुहोला । अहिले नै बैठक निष्कर्षमा पुगेको छैन । अध्यक्ष प्रचण्डले जवाफ दिएपछि एउटा निष्कर्षमा पुग्न सकिएला । अहिलेसम्म पार्टी निर्माणको कुरा भएको छ । कस्तो विचार भन्नेमा खासै कुरा भएको छैन । वैचारिक र सैद्धान्तिक समाजवादी हुनुपर्छ भन्ने उठेको छ ।

शान्ति प्रक्रियामा आएपछि पार्टी १४ वर्ष सत्तामा रहेछ । यसबिचमा पार्टी ठुलो हुनुभन्दा कमजोर भएको छ । यो प्रश्न अनुत्तरित छ । सरकारमा बस्नै पर्थ्यो भन्ने अर्को तर्क थियो । संविधान हामीले निर्माण गर्ने, त्यस अन्तर्गत सरकारमा नबसेको भए झन् पार्टी रक्षा हुँदैन । त्यो त बस्नै पर्थ्यो भन्ने कुरा उठेको थियो । जहाँसम्म सत्तामा भन्दा प्रतिपक्षमा पुग्दा खुसी भएको भन्ने कुरा विल्कुल सही होइन । त्यो कुरा गलत हो । यद्यपि सरकारमा रहँदा कमी कमजोरीबारे प्रश्न उठेको छ ।

## स्वेच्छाले.......

फरक प्रकृतिका आदिवासीहरु 'स्वेच्छिक रुपमाअलग बसिरहेका र भर्खैरै सम्पर्कमा आएका आदिवासी' हुन् ।

आधुनिक विश्व र बजारबाट टाढा रहेका आदिवासीहरुलाई 'स्वेच्छिक रुपमा अलग बसिरहेका आदिवासी' भनिन्छ । केही आदिवासीहरु भने प्रारम्भिक रुपमा विश्व समूदायसंग सम्पर्कमा आएका छन्, यस प्रकारका आदिवासीलाई 'प्रारम्भिक सम्पर्कमा आएका आदिवासी' भनिन्छ ।

संयुक्त राष्ट्रसंघको अनुमानमा यस प्रकारका आदिवासीहरुको लगभग २०० समूहमा रहेका छन् । तिनीहरु बोलिभिया, ब्राजिल, कोलम्बिया, इक्वेडर, भारत, इन्डोनेसिया, पपुवान्युगिनी, पेरु र भेनेजुएलाका दुर्गम जंगलहरूमा बस्छन् । नेपालको सन्दर्भमा राउटेहरु 'प्रारम्भिक सम्पर्कमा आएका आदिवासीहरु' हुन् । तथापि उनीहरुको संस्कार, संस्कृति, विश्वास र परम्पराका आधारमा उनीहरु पनि 'स्वेच्छिक रुपमा अलग बसिरहेका आदिवासी' नै हुन् ।

'स्वेच्छिक रुपमा अलग बसिरहेका र प्रारम्भिक सम्पर्कमा आएका आदिवासी'हरु आधुनिक समाजबाट अलग हुन चाहन्छन् । उनीहरुको आफनै संस्कृति, भाषाको संरक्षण गर्दै परम्परागत प्राकृतिक वातावरणमा रहन चाहन्छन् । यस प्रकारका आदिवासीहरु शिकार, केही परम्परागत कृषिमा निर्भर छन् ।

तर पछिल्लो समयमा तिनीहरूको भूक्षेत्रमा आधुनिक कृषिको विस्तार, खानी उत्खनन्, पर्यटनको आवागमन लगायत प्राकृतिक स्रोतहरूको दुरुपयोग आदिका कारण वनको अतिक्रमण र विनाशले तिनीहरूको जीवनशैलीमा बाधा पुऱ्याउने काम गरिहेका छन् । मानवशास्त्रीहरुको भनाइमा ती आदिवासीले पुस्तादेखि संरक्षण गर्दै आएका प्राकृतिक वातावरणलाई नष्ट भइरहेको छ ।

'स्वेच्छिक रुपमा अलग बसिरहेका र प्रारम्भिक सम्पर्कमा आएका आदिवासी'हरुका सन्दर्भमा विभिन्न प्रकारका मतहरु छन् । तर उनीहरुको साझा विशेषता फरक जीवनशैली र आधुनिक समाजबाट अलग रहने प्रबृत्ति नै हो । केही अनुसन्धानकर्ताहरुको विचारमा केही आदिवासीहरु आधुनिक समाजमा सम्पर्कमा आएर पनि स्वेच्छाले अलग बसेका हुन् ।

ब्राजिलको पानारा आदिवासी यस्तै स्वेच्छिक रुपमा अलग बसेको आदिवासी हुन् । व्रिटिस अनुसन्धानकर्ता रिचर्ड मेसनको खोज अनुसार ब्राजिलमा सन्चालित एक सरकारी परियोजनाबाट प्रभावित भए पछि पानोराहरुको अस्तित्व संकटमा परेको थियो । परिणाम स्वरुप वातावरणीय ह्रास र अज्ञात रोग लागेर २५० भन्दा बढी ती आदिवासीहरुको मृत्यु भएको थियो । ब्राजिल सरकारले उनीहरुको भूक्षेत्र अतिक्रमण गरी उनीहरुले प्रयोग गरिरहेको भूमिमा आधुनिक कृषि प्रारम्भ गरे पछि यो संकट आइलागेको हो ।

यो परियोजनाले सो जातिहत्या नै गरेको भनाइ पनि छ । अहिले ब्राजिलको संघीय सरकारले ती जातिहरुसंग कुनै सम्पर्क नगर्ने शर्तमा आफनो परियोजना फिर्ता गरेको छ । ती आदिवासीहरु प्रारम्भिक सम्पर्कमा आए पछि अलग बसेका आदिवासी हुन् ।

कोलम्बियामा यस्तै एउटा घटना चर्चित रहेको छ । नुकाम भन्ने कोलम्बियाको आदिवासीलाई सरकारले आधुनिक जीवनशैलीमा रुपान्तरण गर्ने गरी नजिकैको शहरमा बसोबासको प्रबन्ध गऱ्यो । प्राकृतिक वातावरणमा बसोबास गरिरहेका आधाभन्दा बढी नुकामहरुमा शहरी प्रदुषणका कारण श्वासप्रश्वासको प्रकोप फैलियो । केही नुकामहरु लागुऔषध तस्कर हरुसंगको झडपमा परेर मृत्यु भए ।

यो आदिवासी पनि प्रारम्भिक सम्पर्कमा आएका आदिवासी हुन् । उनीहरुलाई अहिले अलग्गै बस्ने गरी त्यहाँको सरकारले विशेष व्यबस्था गरेको छ ।

हाम्रो छिमेकी मुलुक भारतको अण्डमान टापुहरुमा रहेका आदिवासीहरु पनि आधुनिक संसारमा आउन नचाहने जाति हुन् । भारत सरकारले उनीहरुको विशेष संरक्षित क्षेत्रका रुपमा मान्यता दिएको छ ।

बोलिभयाको माडिदी र हेथ नदीको आसपास बस्ने टोरोमेना आदिवासीहरु त्यहाँको राष्ट्रिय निकुन्ज बस्ने गरेका छन् । पूर्वी अमेजनमा बस्ने आवा जाति अहिले पनि वाँकी विश्वमा सम्पर्कमा नआएका जाति हुन् । उनीहरुलाई लुप्त जाति पनि भनिन्छ । यस्तै अमेजन बेसिनमा रहेका उरु-उरु-हाउ-हाउ तथा हिमारिमा, काम्पाजाति पनि

बाँकी पेज ५ मा



# तीन देशद्वारा गाजामा युद्धविरामको आह्वान

क्यानबेरा- अष्ट्रेलिया, क्यानाडा र न्युजिल्यान्डले संयुक्त विज्ञप्ति मार्फत गाजामा तत्काल युद्धविरामको आह्वान गरेका छन् ।

अष्ट्रेलियाका प्रधानमन्त्री एन्थोनी अल्बनिज, क्यानाडाका प्रधानमन्त्री जस्टिन ट्रुडो र न्युजिल्यान्डका प्रधानमन्त्री क्रिस्टोफर लक्सनले गाजामा तत्काल युद्धविराम ,हेजबुल्लाह र इजरायलबिचको द्वन्द्वको जोखिमबारे वक्तव्य जारी गरेका हुन ।

विज्ञप्तिमा गाजाको भयावह अवस्थाले निम्त्याएको मानवीय दुःख अस्वीकार्य भएको उल्लेख गरिएको छ । उनीहरूले हमासले द्वन्द्वको अन्त्य गरी सबै बन्धकहरूलाई रिहा गर्नु पर्नेमा समेत जोड दिएका छन् ।

अक्टोबर-७ को आक्रमण र जारी आतंकवादी कार्यका लागि हमासको निन्दा गर्दै उनीहरूले गाजाको भावी शासनमा हमासको कुनै भूमिका नरहेको उल्लेख गरेका छन् ।

इजरायलले अन्तर्राष्ट्रिय समुदायको चिन्ता सुन्नुपर्ने कुरामा जोड दिँदै उनीहरूले नागरिकको सुरक्षाको लागि अन्तर्राष्ट्रिय मानवीय कानूनको पालना गर्न आह्वान गरेका छन् ।

उनीहरूले गाजामा तत्काल युद्धविरामको आह्वान गर्दै मानवीयता सम्बोधनका लागि सहायता प्रवाहमा निरन्तर वृद्धि गर्न आवश्यक रहेको जनाएका छन् । यसै क्रममा अमेरिकी राष्ट्रपति जो बाइडेनको व्यापक युद्धविराम सम्झौतालाई स्मरण गर्दै उनीहरूले सम्झौताको लागि समर्थन व्यक्त गरेका छन् ।

निरन्तरको युद्धले गाजामा तनाव बढ्ने चिन्तासहित नेताहरूले अप्रिल १३-१४ मा इरानले इजरायलमा गरेको आक्रमणको निन्दा गर्दै इरानलाई थप अस्थिरता नफैलाउने आग्रह गरका छन् ।

उनीहरूले युद्ध विराम आह्वानको संयुक्त विज्ञप्तिमा तेल अवीवमा ड्रोन आक्रमण र अन्तर्राष्ट्रिय ढुवानीमा हुथीहरूको गैर न्यायिक कार्यहरूको पनि निन्दा गरेका छन् ।

अष्ट्रेलिया, क्यानाडा र न्युजिल्यान्डका नेताहरूले राष्ट्रसंघीय सुरक्षा परिषद्को प्रस्ताव-१७०१ कार्यान्वयन गर्ने कूटनीतिक प्रयासलाई समर्थन व्यक्त गर्दै संलग्नहरुलाई संयमता अपनाउन आग्रह गरेका छन् ।

युद्ध लम्बिदाले इजरायल र लेबनान र यहाँका नागरिकका लागि विनाशकारी परिणाम निम्त्याउनेसमेत विज्ञप्तिमा उल्लेख छ ।

# इजरायल नियन्त्रित गोलान हाइटमा रकेट आक्रमण



एजेन्सी- लेबनानबाट प्रहार गरिएको रकेटले इजरायली कब्जामा रहेको गोलान हाइट्समा १२ जनाको ज्यान गएको हमासद्वारा सञ्चालित गाजाको स्वास्थ्य मन्त्रालयले जनाएको छ ।

हेज्बुल्लाहले लेबनानबाट मजदल शम्सको ड्रुज सहरको फुटबल मैदानमा रकेट प्रहार गरी १० देखि २० वर्षका युवाहरूको हत्या गरेको इजरायली सेनाले बताएको छ ।

आक्रमणमा अन्य १८ जना युवाहरू घाइते भएका आपतकालीन सेवाले जनाएको हो ।

'इजरायलले यो घातक आक्रमणको जवाफ दिनेछ र हेजबुल्लाहले यो हमलाका लागि अहिलेसम्म कहिल्यै नचुकाएको भारी मुल्य चुकाउनेछ,' प्रधानमन्त्री बेन्जामिन नेतान्याहूले आफ्नो कार्यालयबाट जारी विज्ञप्तिमा भने ।

नेतान्याहूले संयुक्त राज्य अमेरिकाबाट इजरायल फर्केपछि सुरक्षा मन्त्रीमण्डलको बैठक बस्ने बताएका छन् ।

लेबनानका लागि विशेष संयोजक जेनिन हेनिस-प्लास्चर्ट र लेबनानमा संयुक्त राष्ट्रसंघीय अन्तरिम बल (युनिफिल) का प्रमुख एरोल्डो लाजारोले संयुक्त वक्तव्य जारी गर्दै यस समयमा अधिकतम संयमता अपनाउन आग्रह गरेका छन् ।

अमेरिकी राष्ट्रिय सुरक्षा परिषद्ले यस 'भयानक आक्रमण'को निन्दा गरेको छ ।

'लेबनानी हेजबुल्लाहसहित सबै इरान समर्थित आतंकवादी समूहविरुद्ध इजरायलको सुरक्षाका लागि हाम्रो समर्थन अटल छ,' एक प्रवक्ताले विज्ञप्तिमा उल्लेख गरेका छन् ।

इजरायली कब्जामा रहेको गोलान हाइट्समा भएको घातक रकेट आक्रमणमा तेहरान समर्थित हेजबुल्लाहमाथि लगाइएको आरोपको विरोध गर्दै इरानले आइतबार लेबनानमा कुनै पनि नयाँ सैन्य आक्रमणले 'अप्रत्याशित परिणाम' निम्त्याउन सक्ने चेतावनी इजरायललाई दिएको छ ।

'इजरायलको कुनै पनि अज्ञानी कार्यले यस क्षेत्रमा अस्थिरता, असुरक्षा र युद्धको दायरा विस्तार गर्न सक्छ,' विदेश मन्त्रालयका प्रवक्ता नासिर कनानीले भने। "इजरायल यस्तो मूर्खतापूर्ण व्यवहारको अप्रत्याशित परिणाम र प्रतिक्रियाका लागि जिम्मेवार हुनेछ,' उनले भने।

युरोपेली सङ्घको विदेश नीति प्रमुख जोसेप बोरेलले आक्रमणको निन्दा गर्दै स्वतन्त्र अनुसन्धानको आह्वान गरेका छन् ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

– प्रेमचन्द

## सम्पादकीय

### नेताहरूको बेथिति, मनपरीतन्त्र र हैकमबादी प्रवृति

नेकपा माओवादी केन्द्रका अध्यक्ष प्रचण्डलाई सत्ताबाट हटाएर नेपाली कांग्रेसको सहयोगमा सरकारको नेतृत्वगर्न पुगेका नेकपा (एमाले) अध्यक्ष खड्गप्रसाद शर्मा ओली प्रधानमन्त्री भएपछिका दिनहरू उति आशालाग्दा देखिएका छैनन् । विशेषगरी 'सुशासन'को नारा दिदै 'भ्रष्टाचार गर्दिन र गर्न दिन्न' भन्ने कथन हास्यास्पद थेगोमा सीमित हुनपुगेको छ । ओली मन्त्रिपरिषद्का सदस्यहरू कतिपय पहिले नै विवादमा मुछिएका छन् भने केही मन्त्रीको 'स्वार्थ बाझिएको' पनि स्पष्टै देखिन्छ ।

सरकारमा मुख्य घटक नेपाली कांग्रेसबाट छानिएका मन्त्रीको सूचीमा अपेक्षाकृत बढी विवादास्पद नाम भएकाले प्रधानमन्त्री ओलीको इच्छाविपरीत भएको भनी शङ्काको सुविधा दिन सकिन्थ्यो । तर, प्रदेश सरकारहरूमा देखिएको बेथिति र अनैतिक अभ्यासले ओली पनि चोखा देखिएनन् ।

एमालेको भागमा परेको लुम्बिनी प्रदेश सरकार गठन गर्दा संसदीय परम्परालाई मिच्दै संसदीय दलका उपनेता चेतनारायण आचार्यलाई मुख्यमन्त्री बनाइयो । यसबाट एमाले संसदीय दलका नेता लीला गिरीको तेजोबध त भयो नै राजनीतिक नैतिकता र संसदीय परम्पराको पनि उपहास भयो । त्यस्तै नेपाली कांग्रेसका तर्फबाट हत्या, अपहरण, गुण्डागर्दीको अभियोग लागिसकेकाहरूलाई सरकारमा पठाइयो । नवनियुक्त मन्त्री बादशाह कुर्मीमाथि बाँके परसपुरकी निर्मला कुर्मीको अपहरण र हत्या गरेको आरोप लागेको छ ।

अर्का मन्त्री प्युठानका सरोज राणा गुण्डागर्दी र मानव बेचबिखनको अभियोगमा मुद्दा चल्दा ६ महिना पुर्पक्षमा थुनामा राखिएका व्यक्ति हुन् । लाग्छ, नैतिक पतन हुने कसुरमा मुद्दा चल्नु वा आरोप लाग्नु कांग्रेसबाट मन्त्री बन्ने एउटा आधार हो । नत्र विवादमा नमुछिएका व्यक्ति पनि थिए होलान् मन्त्री बनाउन मिल्ने !

लुम्बिनी प्रदेशलाई यसरी बेथिति र अमर्यादाको प्रदेश बनाउनुमा पनि मूलतः केन्द्रीय नेतृत्व नै जिम्मेवार देखिएको छ । एमालेका प्रदेश संसदीय दलका नेता गिरीले पदबाट राजीनामा दिएका छन् भने कांग्रेस प्रदेश समितिका सभापति अमरसिंह पुनले पनि असन्तुष्टि प्रकट गरिसकेका छन् ।

नेताहरूले गरेको बेथितिले मुलुक र ऐतिहासिक योगदान भएका पार्टीहरूकै पनि बेइज्जती तथा क्षति भएकोमा तिनले चिन्ता प्रकट गरेको भने खासै सुनिएको छैन ।

त्यस्तै यौन दुर्व्यवहारको आरोप लागेका व्यक्तिलाई निर्वाचन आयुक्तमा नियुक्ति दिन संवैधानिक परिषद्ले गरेको सिफारिसलाई संसदीय सुनुवाइ समितिका सदस्यहरूले सोमवार अस्वीकृत गरिदिएका छन् । यसबाट समितिको औचित्य त पुष्टि भएको छ तर संवैधानिक परिषद्का पदाधिकारी र सचिवालयको इमानदारीमा प्रश्न उठेको छ ।

त्यसो त राज्यका अधिकांश महत्त्वपूर्ण पदमा पुगेका व्यक्तिहरूको योग्यता र क्षमतामा सधैँ नै प्रश्न उठी नै रहेको छ । जनताले चुनेकाहरूमात्र होइन लोकसेवाले छानेका र राजनीतिक नियुक्ति पाएकाहरूमध्ये पनि अधिकांश कालान्तरमा 'कुपात्र' सिद्ध हुनेगरेका छन् ।

संवैधानिक परिषद्ले गर्ने गरेका सिफारिसहरूमा भने प्रायः ऐन र संविधानको मर्मलाई उपेक्षा गर्ने गरेको देखिएको छ । संसदीय सुनुवाइ छलेर गरिएका नियुक्तिदेखि सुनुवाइमा स्वीकृत गरिएकै पनि कतिपय पात्रहरूको विगत विवादास्पद रहेको र योग्यता नपुगेको पोल पटकपटक खुलेको छ ।

यस्तै त्रुटि अब दोहोरिन नदिने हो भने संसदीय समितिले नैतिक आचरणका आधारमा अस्वीकृत गरेको व्यक्तिको नाम सिफारिस गर्ने संवैधानिक परिषद्का सबै पदाधिकारीले नैतिक जिम्मेवारी लिनुपर्छ । ऐनले तोकेको दायित्व पूरा नगर्ने संवैधानिक परिषद्को सचिवलाई पनि यसमा जिम्मेवार बनाइनुपर्छ । यद्यपि, सिफारिसको मूल जिम्मेवारी परिषद्का अध्यक्षले लिनुपर्छ ।

अहिलेको जस्तो लज्जास्पद अवस्था उत्पन्न हुन नदिने हो भने संवैधानिक निकायका पदाधिकारी र सदस्यमा परिषद्का पदाधिकारीहरूबीच भागबन्डा गर्ने प्रथा पनि बन्द गर्नुपर्छ । राजनीतिक नेताका कृपापात्रलाई नियुक्ति दिने चक्करमा नै त यस्ता लाजमर्दा निर्णय हुने हुन् ।

यसरी देशको शासनसत्ता संचालन हुने निकाय र बिभिन्न संबैधानिक निकाय र विदेश स्थित कुटनीतिक नियोगमा हुने राजदूतहरुको नियुक्तिमा समेत राजनीतिक दलहरुबाट हुने गरेको भागबण्डामा योग्यताको आधारमा नभई व्यक्तिगत चाकरी चाप्लुसी र पहुँचको आधारमा हुने गरेको कारण पनि विश्वमाझ र आम नागरिकमा समते वर्तमान राजनीतिक दलका क्रियाकलाप माथि अविश्वास बढेको छ । तर तीनलाए आम जनता र देशको अवस्थाको बारेमा कुनै चिन्ता छैन । भनिन्छ काग कराउदै गर्द पिना सुक्दै गर्छ भन्ने नेपाली उखान बर्तमानको राजनीतिक दलको व्यवहारबाट पनि पुष्टी भएको छ । देशमा हाल अविरल वर्षाका कारण आइरहेको विपतीको स्थिति र हालै नेपाली आकाश असुरक्षित रहेको बारेमा पनि सरकार, संसद र सम्बद्ध निकाय गम्भिर बन्न सकेको छैन । यो नै देशको लागि दुर्भाग्यको अवस्था बनेको छ । तसर्थ दुवै दलका शीर्ष नेताहरूको बेथिति, मनपरी र हैकमविरुद्ध आवाज उठाउने आँट त्यही पार्टीका नेताहरूले नगरुन्जेल उनीहरू सुध्रिने सम्भावना देखिँदैन । ठूला दलका नेताहरूले आआफ्ना नेता र प्रवृत्ति फेरेनन् भने जनताले ती दल र तिनका नेताहरूलाई पक्कै बदल्नेछन् ।

# सिंहदरबारका 'कठपुतली' बने प्रदेश प्रमुख !

● केशव सावद

देश संघीयतामा गए पनि प्रदेश सरकारहरु सिंहदरबारबाटै चल्ने गरेका छन् । संघमा गठबन्धन हेरफेर हुँदा प्रदेशमा पनि सरकार ढल्ने-बनिने गरेका छन् । प्रदेश सरकारहरु त अस्थिर भएकै छन्, संघमा राष्ट्रपतिको जस्तै प्रदेश सरकार गठनमा संवैधानिक भूमिका खेल्ने प्रदेश प्रमुखहरुको समेत सिंहदरबारबाटै पजनी गर्ने गरिएको छ ।

संविधानको धारा १६३ (३) मा राष्ट्रपतिले पदमुक्त नगर्दासम्म प्रदेश प्रमुखको पदावधि पाँच वर्षको हुने उल्लेख छ । तर, संघीय सरकार परिवर्तनसँगै प्रदेश प्रमुखहरु पदावधि बाँकी हुँदै फेरबदल हुने क्रमले निरन्तरता पाउँदै गएको छ ।

केपी शर्मा ओलीको नेतृत्वमा कांग्रेस-एमालेको गठबन्धन सरकार बनेपछि पछिल्लोपटक सातमध्ये तीन प्रदेशका प्रदेश प्रमुखहरु बर्खास्त गरेर नयाँ प्रदेश प्रमुखहरु नियुक्त गर्ने निर्णय गरिएको छ ।

सोमबार बसेको मन्त्रिपरिषद् बैठकले कर्णाली, लुम्बिनी र वागमती प्रदेशका बहालवाला प्रमुख बर्खास्त गरेर नयाँ प्रदेश प्रमुखहरु नियुक्तिका लागि राष्ट्रपतिसमक्ष सिफारिस गर्ने निर्णय गरेको हो ।

मन्त्रिपरिषद्ले गरेको निर्णय र सिफारिसका आधारमा अब राष्ट्रपति रामचन्द्र पौडेलले अब तीनवटै प्रदेशका लागि नयाँ प्रदेश प्रमुखहरु नियुक्त गर्ने छन् । सरकारले कर्णालीमा यज्ञराज जोशी, लुम्बिनीमा कृष्णबहादुर घर्तीमगर र वागमतीमा दीपकप्रसाद देवकोटालाई नियुक्तिको सिफारिस गरिसकेको छ ।

संघीय सरकारमा प्रतिनिधित्व गर्ने ठूला दलहरु आफूनिकटका व्यक्तिहरुलाई प्रदेश प्रमुखमा नियुक्त गर्दै सत्ता बाहिर रहेका दलनिकटका व्यक्तिलाई जिम्मेवारीमुक्त गर्दै आएका छन् ।

सरकारले सोमबारको मन्त्रिपरिषद् बैठकबाट बर्खास्त गरेका कर्णालीका प्रदेश प्रमुख तिलक परियार र लुम्बिनीका प्रदेश प्रमुख अमिक शेरचन प्रतिपक्षमा रहेको नेकपा माओवादी केन्द्रका तर्फबाट सिफारिसमा परेका व्यक्ति थिए ।

कर्णाली र लुम्बिनीका नयाँ प्रदेश प्रमुख

यस्तै वागमतीमा बर्खास्त गरिएका यादवचन्द्र शर्मा प्रतिपक्षी दल नेकपा एकीकृत समाजवादीको सिफारिसमा प्रदेश प्रमुखमा नियुक्त गरिएका व्यक्ति हुन् । शर्माको स्थानमा सत्ताको नेतृत्व गरिरहेको नेकपा एमालेले कैलालीको धनगढीका देवकोटालाई प्रदेश प्रमुख बनाएको छ । उनी एमालेको केन्द्रीय अनुशासन आयोगका सदस्य हुन् ।

माओवादी केन्द्रनिकट परियार र शेरचनलाई हटाइएका प्रदेशहरु सत्ता साझेदार नेपाली कांग्रेसको भागमा परेका छन् । कांग्रेसले परियारका ठाउँमा पार्टीको केन्द्रीय सदस्यसमेत रहेका कञ्चनपुरको महेन्द्रनगरका यज्ञराज जोशी र शेरचनको ठाउँमा रोल्पा कांग्रेसका पूर्वसभापति घर्तीमगरलाई प्रदेश प्रमुख बनाएको छ ।

संघीय सरकारमा गठबन्धन परिवर्तन हुँदा प्रदेश सरकारमा भागबण्डा भएको यो पहिलो पटक भने होइन । यसअघि पनि कांग्रेस-माओवादी, एमाले-माओवादीबीच विभिन्न समयमा भएका सहमतिपछि प्रदेश सरकार र प्रदेश प्रमुखहरुसमेत परिवर्तन हुँदै आएका थिए ।

संघमा सरकार ढल्नेवित्तिकै प्रदेशमा पनि सत्ता परिवर्तन गर्ने र प्रदेश प्रमुखहरु फेरबदल गर्ने सिलसिला चलेपछि प्रदेश सरकारहरु जनतामा अलोकप्रिय र बदनाम हुने क्रम बढेको छ । प्रदेश प्रमुखहरु परिवर्तन गर्ने दलहरुको कदम प्रदेश संरचना कमजोर बनाउने माध्यम बन्न पुगेको कतिपयको तर्क छ ।

जनताले उसै पनि प्रदेश संरचनाको औचित्यमाथि प्रश्न उठाउने गरेका छन् । यस्तो बेलामा संघमा हुने राजनीतिक अस्थिरतालाई प्रदेशसम्म आपूर्ति गर्ने काम कांग्रेस, एमाले, माओवादीजस्ता प्रमुख दलहरुले नै गर्दै आएका छन् ।

संविधान जारी भएपछि सम्पन्न पहिलो प्रतिनिधिसभा निर्वाचन सम्पन्न भएपछि प्रदेशहरुले पहिलोपटक २०७४ माघ पहिलो साता पहिलो पटक प्रदेश प्रमुखहरु पाएका थियो ।

त्यसयता संविधानअनुसार हरेक ५ वर्षमा प्रदेश प्रमुखहरु फेरिने भए पनि साढे ६ वर्षको अवधिमा प्रदेशहरुले तीनदेखि पाँचजना प्रदेश प्रमुखहरु भोगिसकेको छ ।

२०७४ माघ ५ गते पहिलो प्रदेश प्रमुख पाएका सात प्रदेशमध्ये कोशीले सबैभन्दा कम तीनजना तथा गण्डकी, मधेश र सुदूरपश्चिम प्रदेशले समान पाँच-पाँचजना प्रदेश प्रमुख पाइसकेको छ । सरकारले सोमबारमात्रै नयाँ प्रदेश प्रमुख नियुक्त गर्ने निर्णय गरेका तीन प्रदेशहरु कर्णाली, लुम्बिनी र वागमती भने चौथो प्रदेश प्रमुख पाउन गइरहेका छन् ।

साढे ६ वर्षमा ३० जना प्रदेश प्रमुख

संविधानअनुसार सातवटै प्रदेशहरुले पहिलो प्रदेश प्रमुख पाएको ६ वर्ष ६ महिना पुगेको छ । यो अवधिमा सातवटै प्रदेशहरुले ३० जना प्रदेश प्रमुख (सरकारको पछिल्लो निर्णयसहित) पाइसकेको छ ।

जसमध्ये एकजना मात्र ३ महिनाका लागि र एकजना मात्र ६ महिनाका लागि प्रदेश प्रमुख बनेका छन् । ३ महिनाका लागि प्रदेश प्रमुख बन्नेमा गण्डकीकी पूर्वप्रदेश प्रमुख सीताकुमारी पौडेल हुन् भने ६ महिनाका लागि गंगाप्रसाद यादव सुदूरपश्चिममा प्रदेश प्रमुख बनेका थिए ।

गण्डकीका लागि तेस्रो प्रदेश प्रमुख बनेकी पौडेलको कार्यकाल ०७८ वैशाख २० देखि ०७८ साउन १२ सम्म रह्यो । यस्तै सुदूरपश्चिमका लागि ०७८ वैशाख २० मा तेस्रो प्रदेश प्रमुख रहेका रुपमा नियुक्त भएका यादवको कार्यकाल ०७८ कात्तिक २३ सम्म रहेको थियो ।

सुदूरपश्चिम प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) मोहनराज मल्ल - ०७४ माघ ५ देखि ०७६ कात्तिक १७ सम्म
२) शर्मिलाकुमारी पन्त - ०७६ कात्तिक १८ देखि ०७८ वैशाख २० सम्म
३) गंगाप्रसाद यादव - ०७८ वैशाख २० देखि ०७८ कात्तिक २३ सम्म
४) देवराज जोशी - ०७८ कात्तिक २३ देखि ०८० फागुन ३० सम्म
५) नजिर मियाँ - ०८० फागुन ३० देखि हालसम्म

कर्णाली प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) दुर्गा केशर खनाल - ०७४ माघ ५ देखि ०७६ कात्तिक १७ सम्म
२) गोविन्दप्रसाद कलौनी - ०७६ कात्तिक १८ देखि ०७८ कात्तिक २३ सम्म
३) तिलक परियार - ०७८ कात्तिक २३ देखि (पदमुक्त गर्ने साउन १४ को मन्त्रिपरिषद् निर्णय)
४) यज्ञराज जोशी - (नियुक्त गर्ने साउन १४ को मन्त्रिपरिषद् निर्णय)

लुम्बिनी प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) उमाकान्त झा - ०७४ माघ ५ देखि ०७६ कात्तिक १७ सम्म
२) धर्मनाथ यादव - ०७६ कात्तिक १८ देखि ०७८ साउन १२ सम्म
३) अमिक शेरचन - ०७८ साउन १३ देखि (पदमुक्त गर्ने साउन १४ को मन्त्रिपरिषद् निर्णय)
४) कृष्णबहादुर घर्तीमगर - (नियुक्त गर्ने साउन १४ को मन्त्रिपरिषद् निर्णय)

गण्डकी प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) बाबुराम कुँवर - ०७४ माघ ५ देखि ०७६ कात्तिक १७ सम्म
२) अमिक शेरचन - ०७६ कात्तिक १८ देखि ०७८ वैशाख २० सम्म
३) सीताकुमारी पौडेल - ०७८ वैशाख २० देखि ०७८ साउन १२ सम्म
४) पृथ्वीमान गुरुङ - ०७८ साउन १२ देखि ०८० फागुन ३० सम्म
५) डिल्लीराज भट्ट - ०८० फागुन ३० देखि हालसम्म

वागमती प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) अनुराधा कोइराला - ०७८ वैशाख २० देखि ०७८ साउन १२ सम्म
२) विष्णुप्रसाद प्रसाईं - ०७६ कात्तिक १८ देखि ०७८ भदौ ३ सम्म
३) यादवचन्द्र शर्मा - ०७८ भदौ ३ देखि (पदमुक्त गर्ने साउन १४ को मन्त्रिपरिषद् निर्णय)
४) दीपकप्रसाद देवकोटा - (नियुक्त गर्ने साउन १४ को मन्त्रिपरिषद् निर्णय)

मधेश प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) रत्नेश्वरलाल कायस्थ - ०७४ माघ ५ देखि ०७६ कात्तिक १६ सम्म
२) तिलक परियार - ०७६ कात्तिक १८ देखि ०७७ फागुन ६ सम्म
३) राजेश झा अहिराज - ०७७ फागुन ७ देखि ०७८ साउन ३२ सम्म
४) हरिशंकर मिश्र - ०७८ भदौ १ देखि २०८० फागनु ३० सम्म
५) सुमित्रादेवी भण्डारी - ०८० फागुन ३० देखि हालसम्म

कोशी प्रदेशका हालसम्मका प्रदेश प्रमुख

१) प्रा.डा. गोविन्दबहादुर तुम्बाहाङ - ०७४ माघ ५ देखि ०७६ कात्तिक १६ सम्म
२) सोमनाथ अधिकारी 'प्यासी' - ०७६ कात्तिक १८ देखि ०७८ कात्तिक २३ सम्म
३) परशुराम खापुङ - ०७८ कात्तिक २३ देखि हालसम्म

के भन्छ संविधान ?

संविधानको धारा १६३ (१) मा प्रत्येक प्रदेशमा नेपाल सरकारको प्रतिनिधिको रूपमा प्रदेश प्रमुख रहने व्यवस्था छ भने उपधारा २ मा राष्ट्रपतिले प्रत्येक प्रदेशका लागि एक प्रदेश प्रमुख नियुक्ति गर्ने उल्लेख गरिएको छ । उपधारा ३ मा राष्ट्रपतिले पदावधि समाप्त हुनुभन्दा अगावै निजलाई पदमुक्त गरेमा बाहेक प्रदेश प्रमुखको पदावधि पाँच वर्षको हुने भनिएको छ ।

एउटै व्यक्ति एक पटकभन्दा बढी एकै प्रदेशमा प्रदेश प्रमुख हुन नसक्ने व्यवस्था संविधानको धारा १६४ (४) ले गरेको छ । धारा १६४ मा प्रदेश प्रमुखको योग्यता तोकिएको छ । जसमा संघीय संसदको सदस्य हुन योग्य भएको, ३५ वर्ष उमेर पूरा भएको र कुनै कानूनले अयोग्य नभएको व्यक्ति प्रदेश प्रमुखका लागि योग्य हुने भनिएको छ ।

संविधानको धारा १६५ मा प्रदेश प्रमुखको पद रिक्त हुने अवस्था तोकिएको छ । जसअन्तर्गत उपधारा १ मा राष्ट्रपति समक्ष लिखित राजीनामा दिएमा, पदावधि समाप्त भएमा वा सो अगावै राष्ट्रपतिले निजलाई पदमुक्त गरेमा, मृत्यु भएमा प्रदेश प्रमुखको पद रिक्त हुने व्यवस्था गरिएको छ ।

उपधारा २ मा भनिएको छ, 'कुनै प्रदेशको प्रदेश प्रमुखको पद रिक्त भएको अवस्थामा प्रदेश प्रमुखको नियुक्ति नभएसम्मका लागि राष्ट्रपतिले अर्को कुनै प्रदेशको प्रदेश प्रमुखलाई त्यस्तो प्रदेशको समेत कामकाज गर्ने गरी तोक्न सक्नेछ ।'

संविधानको धारा १६६ मा प्रदेश प्रमुखको काम, कर्तव्य र अधिकार उल्लेख गरिएको छ ।

धारा १६६ (१) अनुसार प्रदेश प्रमुखले संविधानबमोजिम आफूलाई प्राप्त अधिकारको प्रयोग र कर्तव्यको पालन गर्ने, उपधारा २ मा उपधारा १ बमोजिम अधिकारको प्रयोग गर्दा वा कर्तव्यको पालन गर्दा संविधानबमोजिम कुनै निकाय वा पदाधिकारीको सिफारिसमा गरिने भनी किटानीसाथ व्यवस्था भएको कार्यबाहेक प्रदेश प्रमुखबाट सम्पादन गरिने अन्य जुनसुकै कार्य प्रदेश मन्त्रिपरिषदको सिफारिस र सम्मतिबाट हुने भनिएको छ ।

त्यस्तो सिफारिस र सम्मति मुख्यमन्त्रीमार्फत् पेश हुने संविधानमा उल्लेख छ । उपधारा ३ मा भनिएको छ, 'उपधारा २ बमोजिम प्रदेश प्रमुखको नाममा हुने निर्णय वा आदेश र तत्सम्बन्धी अधिकारपत्रको प्रमाणीकरण प्रदेश कानून बमोजिम हुनेछ ।'

खबरहबबाट

# किन अमेरिकामा राष्ट्रपतिको चुनावमा बढी भोट पाउनु पर्याप्त छैन ?



एजेन्सी । अमेरिकामा राष्ट्रपतिको निर्वाचन निकै रोचक अवस्थामा पुगेको छ । अहिले विश्वभरका सञ्चारमाध्यममा यी चुनावको चर्चा भइरहेको छ । वास्तवमा सत्तारुढ डेमोक्रेटिक पार्टीका आधिकारिक उम्मेदवार र वर्तमान राष्ट्रपति चुनावी दौडबाट पछि हटेकाले यो निर्वाचन निकै रोचक बनेको छ ।

रिपब्लिकन पार्टीका उम्मेदवार डोनाल्ड ट्रम्पले आफ्नो चुनावी अभियान सुरु गरिसकेका छन्, जबकि बाइडेनको उम्मेदवारी फिर्ता पछि, उपराष्ट्रपति कमला ह्यारिस दौडमा सामेल भएकी छिन् । उनको पार्टीको आधिकारिक उम्मेदवार घोषणा नभए पनि उनी डेमोक्रेटिक पार्टीबाट राष्ट्रपतिको उम्मेदवार बन्ने अनुमान गरिएको छ ।

प्रश्न - अमेरिकी राष्ट्रपतिको चुनाव कहिले हुन्छ ?

- यो चुनाव छ नोभेम्बर २०२४ मा हुनेछ । चुनाव जित्नेले जनवरी ८, २०२५ देखि ह्वाइट हाउसमा चार वर्षको कार्यकाल पूरा गर्नेछन् ।

राष्ट्रपतिसँग आफैंले केही कानूनहरू पारित गर्ने शक्ति छ, तर सामान्यतया उनले कानूनहरू पारित गर्न कांग्रेससँग काम गर्नुपर्छ । विश्व मञ्चमा अमेरिकी नेतालाई विदेशमा देशको प्रतिनिधित्व गर्ने र विदेश नीति सञ्चालन गर्ने पूर्ण स्वतन्त्रता छ ।

प्रश्न - उम्मेदवार को हुन् र कसरी मनोनयन गरिन्छ ?

- दुवै प्रमुख दलहरूले राज्य प्राइमरी र ककस भनिने मतहरूको शृङ्खला बनाएर राष्ट्रपति पदका उम्मेद्वारहरूलाई मनोनयन गर्छन्, जहाँ आममानिसहरूले आम चुनावमा कुन पार्टीको नेतृत्व कसलाई गराउन चाहन्छन् ।

रिपब्लिकन पार्टीमा पूर्व राष्ट्रपति डोनाल्ड ट्रम्पले आफ्ना प्रतिद्वन्द्वीमाथि ठूलो अग्रता लिएर आफ्नो पार्टीको समर्थन जितेका छन् । त्यसपछि उनी रिपब्लिकन पार्टीको आधिकारिक उम्मेदवार बने ।

यसअघि वर्तमान राष्ट्रपति जो बाइडेन डेमोक्रेटिक पार्टीका आधिकारिक उम्मेदवार थिए तर उनको स्वास्थ्य र टिभी बहसमा ट्रम्पसँगको उनको भिडन्तलाई लिएर प्रश्न उठ्न थालेपछि उनले दौडबाट पछि हट्ने निर्णय गरे । अहिले उपराष्ट्रपति आफ्नो पार्टीमा उम्मेदवारीको दौडमा छन् । प्रजातान्त्रिक पार्टीमा उनलाई जति समर्थन मिलिरहेको छ, त्यसबाट उनलाई आधिकारिक उम्मेदवार बन्न कुनै समस्या नहुने देखिन्छ । त्यसपछि उनले चुनावी अभियान सुरु गर्नेछिन् ।

प्रश्न - डेमोक्रेटिक पार्टीले कमला ह्यारिसको उम्मेदवारीलाई अन्तिम स्वीकृति कहिले दिनेछ ?

- अगस्ट १९ मा शिकागोमा डेमोर्क्याटिक पार्टीको महाधिवेशन हुँदैछ, जसमा उनलाई पार्टीको आधिकारिक उम्मेदवार घोषणा गर्न सकिनेछ ।

प्रश्न - के अन्य दल वा स्वतन्त्र उम्मेदवारहरू अमेरिकी राष्ट्रपतिको चुनावमा उम्मेदवार बन्न पाउँदैनन् ?

- अवश्य पाउँछन् र यो हुन्छ, अहिलेको निवार्चनका लासग केही स्वतन्त्र उम्मेद्वारहरू पनि राष्ट्रपतिका लागि चुनावी मैदानमा छन्, जसमा पूर्व राष्ट्रपति जोन एफ केनेडीका भतिजा रोबर्ट एफ केनेडी जूनियर पनि छन् ।

प्रश्न - डेमोक्रेट र रिपब्लिकनको विचारधारा के हो ?

- डेमोक्रेट एक उदार राजनीतिक पार्टी हो, जसको एजेन्डा मुख्यतया नागरिक अधिकार, व्यापक सामाजिक सुरक्षा, र जलवायु परिवर्तन विरुद्ध लड्ने उपायहरूको लागि प्रयास गर्ने हो ।

रिपब्लिकन अमेरिकाको एक रूढिवादी राजनीतिक पार्टी हो । जिओपी वा ग्रान्ड ओल्ड पार्टी भनेर पनि चिनिन्छ, यो पार्टी कटौती गर्ने, सरकारको आकार घटाउने, बन्दुकको अधिकार र अध्यागमन र गर्भपतनमा कडा प्रतिबन्धको पक्षमा रहेको छ ।

प्रश्न - अमेरिकी राष्ट्रपतिको चुनाव कसरी हुन्छ ?

- अमेरिकी चुनावहरू अलि फरक तरिकाले सञ्चालन गरिन्छ, यहाँ विजेता राष्ट्रव्यापी रूपमा सबैभन्दा बढी मत प्राप्त गर्ने व्यक्ति होइन, बरु, दुवै उम्मेद्वारहरू ५० राज्यहरूमा चुनाव जित्न प्रतिस्पर्धा गर्छन् ।

प्रत्येक राज्यमा तथाकथित इलेक्टोरल कलेज भोटहरूको निश्चित संख्या हुन्छ, आंशिक रूपमा जनसंख्याको आधारमा । कुल ५३८ सिटमा चुनाव हुन लागेको हो । २७० वा सोभन्दा बढी सिट जित्ने उम्मेदवारलाई विजेता मानिन्छ ।

यसमा इलेक्टोरल कलेजको भोटले धेरै महत्व राख्छ । जसले धेरै भोट पाउँछ, उसको जित सामान्यतया पक्का हुन्छ । धेरै जसो राज्यहरू एक पार्टी वा अर्को तर्फ भारी मात्रामा झुकेका हुन्छन्, त्यसैले फोकस सामान्यतया एक दर्जन वा सो राज्यहरूमा हुन्छ जहाँ कुनै पनि पार्टीले जित्न सक्छ । जसलाई व्याटलल्याण्ड वा स्विङ स्टेट भनिन्छ ।

यो सम्भव छ कि कुनै उम्मेदवारले लागि राष्ट्रिय रूपमा सबैभन्दा धेरै मतहरू जित्न सक्छ जसरी हिलारी क्लिन्टनले २०१६ मा धेरै मतहरु प्रप्त गरेकी थिइन् तर अझै इलेक्टोरल कलेजमा पराजित हुन परेको थियो ।

प्रश्न - अमेरिकामा राष्ट्रपतिको निर्वाचनसँगै सिनेटरको चुनाव पनि हुन्छ ?

- हो, यस चुनावमा राष्ट्रपतिसँगै मतदाताले कांग्रेसका नयाँ सदस्यहरू पनि चयन गर्नेछन् । कांग्रेसले प्रतिनिधि सभाको चयन गर्दछ, जहाँ सबै ४३५ सिटका लागि चुनाव हुन्छ । त्यस्तै माथिल्लो सदनको रुपमा रहेको सिनेटमा ३३ सिटका लागि चुनाव हुनेछ ।

हाल, रिपब्लिकनहरूले सदनलाई नियन्त्रण गर्छन्, जसले खर्च योजनाहरू सुरु गर्छ, जबकि डेमोर्क्याटहरूको सिनेटमा बहुमत छ, जसले प्रमुख सरकारी नियुक्तिहरूमा मतदान गर्दछ ।

यी दुवै सदनले कानुन पारित गर्छन् । कुनै पनि सदनमा नियन्त्रक दल राष्ट्रपतिसँग असहमत भएमा ह्वाइट हाउसको योजनालाई रोक लगाउन सकिन्छ ।

प्रश्न- चुनाव कसले जित्यो कहिले थाहा हुन्छ ?

- सामान्यतया चुनावको रातमा नै विजेता घोषणा गरिन्छ, तर २०२० मा सबै मत गणनामा ढिलाईका कारण केही दिन लाग्यो ।

प्रश्न - वर्तमान राष्ट्रपति नभएको अर्को व्यक्ति राष्ट्रपति निर्वाचित भए के हुन्छ ?

- निर्वाचनपछिको अवधिलाई संक्रमणकाल भनिन्छ । नोभेम्बरदेखि जनवरीसम्म, वर्तमान राष्ट्रपतिले निर्वाचित राष्ट्रपतिसँग मिलेर काम गर्छन् । ताकि त्यहाँ काममा सहजता हुन सकोस । त्यसपछि वाशिंगटन, डीसीको क्यापिटल भवनको सिढीमा आयोजना हुने उद्घाटन समारोहको रूपमा चिनिने एक समारोहमा राष्ट्रपतिले जनवरी ८ मा औपचारिक रूपमा शपथ लिनेछन् । त्यसपछि नयाँ राष्ट्रपतिको नयाँ कार्यकाल शुरु भएको मानिने छ ।

प्रश्न - अमेरिकी चुनावमा कसले मतदान गर्न सक्छ ?

- यदि तपाईं अमेरिकी नागरिक हुनुहुन्छ र १८ वर्ष वा माथिको हुनुहुन्छ भने, तपाईंसँग प्रत्येक चार वर्षमा हुने राष्ट्रपति चुनावमा मतदान गर्ने अधिकार हुनुपर्दछ ।

प्रश्न - अमेरिकी चुनावमा धेरै महत्त्वपूर्ण हुने इलेक्टोरल कलेज वा इलेक्टोरल भोट के हो ?

- इलेक्टोरल कलेज भनेको एक प्रक्रिया हो जसमा प्रत्येक राज्यका मतदाता वा प्रतिनिधिहरूले यसको जनसंख्याको अनुपातमा आफ्नो मत हाल्छन्, जसले राष्ट्रपति को हुनेछ भनेर निर्धारण गर्दछ ।

प्रत्येक राज्यले कांग्रेसमा प्रतिनिधित्वको आधारमा निश्चित संख्यामा मतदाताहरू प्राप्त गर्दछ । प्रत्येक राज्यको नीति अनुसार कुल ५३८ निर्वाचकहरू जसलाई सिनेटर पनि भनिन्छ चयन गरिएका हुन्छन् । आम निर्वाचन पछि, प्रत्येक निर्वाचकहरु अर्थात् सिनेटरहरुको मतका आधारमा आधा (२७०) भन्दा बढी मत प्राप्त गर्ने उम्मेदवारलाई विजयी भएको घोषणा गरिन्छ । अर्थात पहिलो निर्वाचनमा अध्याधिक मत ल्याउन सफल भएपनि सिनेटरहरुको ५३८ मा ५० प्रतिशत मत ल्याउन नसकेको खण्डमा भारी मत प्राप्त गरे पनि राष्ट्रपति बन्न पाउँदैन । जुन २०१६ को राष्ट्रपति निर्वाचनमा हिलारी क्लिन्टनले सबै राज्यबाट भारी मत पाए पनि आवश्यक इलेक्ट्रोल मत हासिल गर्न नसक्दा राष्ट्रपति बन्न पाइनन् ।

# पहिलो पटक मानिसमा धातुको कृत्रिम मुटु प्रत्यारोपण



एजेन्सी । चिकित्सा जगतमा नयाँ इतिहास रच्दै चिकित्सकहरूले पहिलो पटक बिरामीमा धातुबाट बनेको कुल कृत्रिम मुटु प्रत्यारोपण गरेका छन् । यो कृत्रिम मुटुले प्राकृतिक मुटु जस्तै काम गर्नेछ । रिपोर्टका अनुसार बेलर कलेज अफ मेडिसिन र टेक्सास हार्ट इन्स्टिच्युटका डाक्टरहरूले पहिलो पटक बिरामीमा बिफाकोर टोटल आर्टिफिसियल हार्ट प्रत्यारोपण गरेका छन् । यो यन्त्रलाई प्राकृतिक मुटु जस्तै रगत पम्प गर्ने गरी डिजाइन गरिएको छ ताकि यसले अन्तिम चरणमा हृदयाघात भएका बिरामीहरूका लागि भरपर्दो विकल्पको रूपमा काम गर्न सकोस् । यो सफल प्रत्यारोपण पछि, गम्भीर हृदयघाती बिरामीहरूमा बाँच्ने क्षमता बढ्न सक्छ । एक हिसाबले, यो कार्डियक टेक्नोलोजीमा एक महत्त्वपूर्ण सफलता हो । रिपोर्टका अनुसार ५७ वर्षीय पुरुषको हृदयघातको समस्या एडभान्स स्टेजमा थियो । साउन ९ गते यी बिरामीको कृत्रिम मुटु प्रत्यारोपण गरिएको थियो । यूएस फूड एन्ड ड्रग एडमिनिस्ट्रेशनले नोभेम्बर २०२३ मा परीक्षणको आधारमा बिरामीहरूमा प्रयोगको लागि यो अनुसन्धान उपकरणलाई अनुमोदन गरेको थियो । यो ट्रायल पनि अध्ययनको रूपमा गरिएको छ ।

मुटु प्रत्यारोपणसम्म काम गर्छ

इन्टरेस्टिङ इन्जिनियरिङको रिपोर्टका अनुसार मुटु प्रत्यारोपणका लागि कुर्नु पर्ने हृदयघातका बिरामीमा यो कृत्रिम मुटुको विकल्पका रूपमा प्रयोग गरिने छ । अर्थात्, यदि बिरामीलाई मुटु प्रत्यारोपण गर्नुपर्‍यो भने, दाता नभेटिएसम्म यो कृत्रिम मुटुलाई विकल्पको रूपमा प्रयोग गरिन्छ । यो कृत्रिम मुटु जडान गरेपछि बिरामीले तीन वर्षसम्ममा मुटु प्रत्यारोपण गर्न सक्नेछन् । एक हिसाबले यो हृदयले यस अवधिको बीचमा पुलको काम गर्नेछ । यो कृत्रिम मुटु ह्युस्टनको एक कम्पनीले चुम्बकीय उत्सर्जन प्रविधिको आधारमा बनाएको हो । उच्च गतिका रेलहरू यस प्रविधिमा चल्छन् ।

भविष्यमा स्थायी हृदयको रूपमा सेवा गर्नेछ

बेलर सेन्ट ल्यूक मेडिकल सेन्टरका सर्जिकल निर्देशक एलेक्सिस शफीले यो एक प्रकारको यन्त्र हो जसले मुटु प्रत्यारोपणका लागि जीवन बचाउने पुलको रूपमा काम गर्न सक्ने बताए । हाल यो छोटो अवधिको लागि काम गर्दछ तर भविष्यको अध्ययन पछि यसलाई लामो समयसम्म पम्प गर्न सक्षम बनाइनेछ । यसरी एक दिन यो मुटु प्रत्यारोपणको स्थायी विकल्प बन्न सक्छ । हाल, हामी आशा गरिरहेका छौं कि टोटल आर्टिफिसियल हार्टले बिस्तारै लाखौं मानिसहरूको जीवन बचाउनेछ र ती बिरामीहरूको जीवनस्तरमा सुधार ल्याउनेछ जसको लागि अर्को विकल्प छैन । कृत्रिम मुटु कार्यक्रम अन्तर्गत विश्वभर अनुसन्धान भइरहेको छ । द्यष्ब्ब्क्रृइच कम्पनी यस सन्दर्भमा अगाडि छ । गत वर्ष अष्ट्रेलिया सरकारले यस कम्पनीलाई अनुसन्धानका लागि १२ करोड डलरको कोष उपलब्ध गराएको थियो ।

यो मुटु कसरी बन्यो ?

यो मुटु पूर्णतया धातुले बनेको छ । यसमा टाइटेनियम प्रयोग गरिएको छ जसबाट भेन्टिकुलर रोटरी ब्लड पम्प बनाइएको छ । यसको साथमा, त्यहाँ एक गतिशील भाग पनि छ जुन एक चुम्बकीय लेविटेड रोटरको रूपमा प्रयोग गरिन्छ । रोटर वेंट्रिकल्सबाट रगत पम्प गर्न प्रयोग गरिन्छ । यस कृत्रिम मुटुको हालको मूल्य २ लाख अमेरिकी डलर रहेको छ ।

# तारेको खानाको स्वादले पेटमा हानि पुऱ्याउन सक्छ

एजेन्सी । मनसुनको समयमा तातातो तेलमा तारेको खानाको स्वाद बडलाई लोभ्याउन सक्छ, तर सावधान रहनुहोस्, यो तपाईंको स्वास्थ्यको लागि हानिकारक हुन सक्छन् । मनसुनमा यसको सेवनले रोग निम्त्याउन पनि सक्छ । वास्तवमा, आयुर्वेदले वात पित्त दोषको बारेमा कुरा गर्छ । उनका अनुसार वर्षायाममा हुने ग्यास्ट्रोइंटेस्टाइनल रोग मुख्यतया दूषित पानी पिउने र खाँदा हुने गरेको छ । आर्द्रता र उच्च गर्मीको कारण, ब्याक्टेरिया, भाइरस र फंगाईहरू खाना र पानी दुवैमा फल्न र बढ्नको लागि अवस्थाहरू सिर्जना हुन्छन् । कहिलेकाहीँ, बाढी र ओभरफ्लो ड्रेनको कारण फोहोर पानी ताजा पानी आपूर्तिमा मिसिएर तिनीहरूलाई दूषित बन्न सक्छ । आयुर्वेदाचार्य डा अभिषेक अनुसार वर्षायाममा शरीरको प्राकृतिक अग्नी क्षमता कमजोर हुन्छ । किनभने यसअघि गर्मी मौसमका कारण शरीरको अग्नी क्षमता कमजोर हुँदै जान्छ, जुन वर्षातमा पनि त्यही अवस्थामा रहन्छ र वर्षायाममा पानी परेकाले सिजनमा एसिडिटी बढ्छ । जसका कारण हरेक प्रकारका खानेकुरा र पानी पनि अम्लीय हुने भएकाले शरीरको अग्नी क्षमता पूर्णतया कमजोर रहन्छ ।

भुटेको खानेकुरा पचाउन कठिनाई हुनु

आयुर्वेद भन्छ कि कमजोर अग्निको अवस्थामा, जब व्यक्तिले भुटेको, खुर्सानी-मसालेदार खाना जस्तै पुरी, पकोडा, कचोरी, भटुरे, आलुचप आदि खान्छ, उसलाई पचाउन समस्या हुन्छ । यसका साथै यस्ता खानेकुरालाई फ्राइ गर्नको लागि बढी तेलको प्रयोग गरिन्छ, जसका कारण यसमा क्यालोरी र फ्याटको मात्रा बढी हुन्छ । वर्षायाममा नियमित रूपमा भुटेको खानेकुरा खाँदा तौल बढ्नुका साथै मोटोपना जस्ता समस्या निम्त्याउन सक्छ ।

यसले जोखिम पनि बढ्छ

यति मात्र होइन, यसका साथै जलन, अपच, एसिडिटीजस्ता समस्या हुन सक्छन्, यसका साथै तारेको खानेकुराले शरीरलाई पोषकतत्व दिँदैन, यसको पौष्टिक मूल्य भने नगण्य हुन्छ । तारेको खानेकुराले शरीरलाई प्रोटिन, भिटामिन, मिनरल्स जस्ता कुनै पनि प्रकारको पोषक तत्व प्रदान गर्दैन । यस्ता खानेकुराको अत्याधिक सेवनले शरीरमा उच्च कोलेस्ट्रोल, मुटुसम्बन्धी समस्या, रगतमा चिनीको मात्रा बढ्ने वा कलेजोको समस्या पनि निम्त्याउन सक्छ ।

आयुर्वेद विज्ञहरुका अनुसार तेलमा तारेको खाना खाने तर होसियारीका साथ खाने । शुद्ध देसी घिउ राम्रो विकल्प हुन सक्छ । यसको लागि एर घिउको प्रयोग उत्तम हुन सक्छ । प्रश्न उठ्छ कि यो एर घिउ के हो ? यो एर गाईको दूधबाट बनेको घिउ हो र भारतीय जातको गाईबाट प्राप्त गरिन्छ । जसमा साहिवाल, गिर, लाल सिन्धी आदि गाई रहेका छन् । तिनीहरूको दूधमा एर केसिन प्रोटीन पाइन्छ, त्यसैले यसको नाम एर हो । यो दूध स्तनपान, भैंसी, बाख्रा र भेडा मार्फत प्राप्त दूध जस्तै छ । तसर्थ यसरी शुद्ध घ्यूमा भुटेको खानाले मात्र शरीरलाई स्वास्थ्य राँख्छ । तसर्थ बजारको तेलमा तारेको खानेकुराबाट टाढै रहनु राम्रो हुन सक्दछ ।

## स्वेच्छाले.......

सम्पर्कमा आएका छैनन् ।

सन् २०१९मा निर्माण भएको 'म्यान अफ दि होल' नामक एक बृत्तचित्रमा देखाइए अनुसार पिरिपकुरा एक जातिका एक व्यक्तिलाई वनबाट उद्धार गरी एक मानवशास्त्रीले घरमा ल्याएका थिए । तर शहरी प्रदुषित वातावरणका कारण ती मानव धेरै दिन बाँच्न सकेनन् ।

यस प्रकार विभिन्न मुलुकमा घुमन्ते तथा जङ्गलमा स्वतन्त्र जीवन बिताइरहेका आदिवासी समुदायका लागि विभिन्न मुलुकमा फरक-फरक चुनौति रहेका छन् । तीनको समाधान गर्न विभिन्न मुलुकको अभ्यासहरु पनि फरक-फरक रहेको पाइन्छ ।

पाराग्वेमा रहेका ओरिया जाति यस्तै सम्पर्क विहिन घुमन्तेहरु हुन् । उनीहरु घुमन्ते हुन्, तिनीहरु शिकार गर्छन् । सिमित कृषि पनि गर्छन् । तर तिनीहरुलाई वन विनाश गरको भनेर बाराम्वार आक्षेप लाग्ने गर्दछ । तर तिनीहरुले वन विनास नगरेर सुरक्षा गरिरहेका हुन्छन् ।

पेरुमा घुमन्ते जाति नोमोल बस्छन् । उनीहरु पनि बाँकी दुनियाँसंग सम्पर्क गर्न चाहदैनन् । भेनेजुयलामा होती, यानोमामी र पियारो जस्ता जातिहरु सम्पर्क बाहिर नै छन् । तिनीहरु आधुनिक विश्वमा आउन चाहदैनन् ।

इक्वेडरका टागइरी र तारोमेनआई त्यहाँका घुमन्ते आदिवासी हुन् । पश्चिम पुपुवान्युगिनीमा पनि यस्तै प्रकतिको मानव अस्तित्व रहेको देखिन्छ । ३० औ विश्व आदिवासी दिवश मनाइरहँदा ती प्रारम्भिक सम्पर्कमा आएका र स्वेच्छिक रुपमा अलग बसेका आदिवासीको अधिकारका बारे विश्वलाई घचघचाएको छ ।

आदिवासी जनजातिको अधिकार सम्बन्धी संयुक्त राष्ट्रसंघीय घोषणापत्रले आदिवासीलाई स्वतन्त्रता, स्वायत्तताको अधिकार प्रदान गरेको छ । संसारले अक्सर बेवास्ता गर्ने गरिएको यो मानव समुदायको अलग्गै बस्ने, फरक हुने र फरक पहिचान कायम गर्ने आत्मनिर्णयको अधिकारको जगेर्ना गर्न विश्वव्यापी बहस सुरु भएको छ ।

आदिवासीहरुका लागि विद्यमान विश्वमा धेरै प्रकारका चुनौतिहरु छन् । नेपाल पनि यसबाट अछुतो छैन । भर्खरै बजारसंग सम्पर्कमा आएका नेपालका आदिवासीहरुमा राउटे एक हो । चेपाङ, राजी, बोटेलगायतका आदिवासीहरु पछिल्लो समयमा आधुनिक समाजमा घुलमिल भएको हो । हुम्लो आदिवासी त केही साता अघि मात्र सरकारले पहिचान गरेको छ । उनीहरुको आफनै प्रकारको जिवीका र जीवनशैली कायम रहेकोमा विवाद छैन । तर आफनोपन छोडे पछि उनीहरुले व्यहोरिरहेको चुनौतिका बारे यहाँ राम्रो ढंगले अनुसन्धान भएको छैन । जल, जमिन र जंङ्गलसंग निकट भएर रमाइरहेका आदिवासीको वासस्थान पछिल्लो समयमा क्रमशः अतिक्रमणमा परिरहेको छ । उनीहरुको थातथलोमा सामूहिक अधिकार खोसिदै गएको छ । आजको हाइपर-कनेक्टेड संसारमा राज्यका नीति निर्माताहरुले आदिवासीको संवेदनशीलता बुझ्न सकेको छैन । नेपालमा मात्र होइन, यो विश्वव्यापी समस्या हो ।

ादिवासी जनजातिहरू अद्बितीय संस्कृतिका उत्तराधिकारी र अभ्यासकर्ता हुन् । उनीहरुसंग वातावरणसँग सम्बन्ध राख्ने ज्ञान प्रणाली रहेको हुन्छ । त्यसैले जहाँका भए पनि आदिवासीहरु प्रभावशाली समाजभन्दा फरक छन् । आदिवासी जनजातिहरूले वर्षौंदेखि आफ्नो पहिचान, आफ्नो जीवनशैली र परम्परागत भूमि, क्षेत्र र प्राकृतिक स्रोतहरूमा आफ्नो अधिकारको मान्यता खोज्दै आएका छन्, तैपनि, तिनीहरूको अधिकार हनन भइरहेको छ ।

आदिवासी जनजातिहरू आज विश्वका सबैभन्दा पिछडिएका र जोखिममा परेका समूहहरूमध्ये एक हुन् । अन्तर्राष्ट्रिय समुदायले अब उनीहरूको अधिकारको रक्षा गर्न र उनीहरूको छुट्टै संस्कृति र जीवन शैली कायम राख्न विशेष उपायहरू आवश्यक छ भनी स्वीकार गरेको छ ।

यी जनसङ्ख्या समूहहरूको आवश्यकताको बारेमा सचेतना जगाउनको लागि, हरेक अगस्ट ९ मा आयोजना गरिने अन्तराष्टिय आदिवासी दिवस मनाइन्छ । यो दिवश केवल नाचगान गरेर रमाइलो गरेर मात्र होइन,

# गिद्ध लोप हुँदा ५ लाख मानिसको मृत्यु !

एउटा समय यस्तो थियो जब भारत वर्षमा ठुलो संख्यामा गिद्ध पाइन्थे ।

गाईवस्तुको सिनोको खोजीमा फोहोर थुपारिएका विशाल ठाउँहरूमा गिद्ध झुम्मिइरहेका हुन्थे । कुनैबेला विमानस्थलबाट उडान भर्ने क्रममा जहाजसँग ठोक्किएर वा जेट इन्जिनमा छिरेर पाइलटका लागि खतरा पैदा गर्दथे ।

तर, जब बिरामी गाईवस्तुका लागि प्रयोग गरिने केही औषधिहरूका कारण दुई दशक भन्दा केही अघिदेखि भारतमा ठुलो संख्यामा पाइने ती गिद्ध मर्न थाले ।

सन् १९९० को दशकको मध्यतिर आइपुग्दा ५ करोडको संख्यामा रहेका गिद्धको संख्या डाइक्लोफेनाक नामको औषधिका कारण करिब शून्यमा आयो । डाइक्लोफेनाक गाईवस्तुमा प्रयोग गरिने स्टेरोइड मुक्त दुखाइ कम गर्ने औषधि हो । यो गिद्धका लागि घातक रहेको छ ।

जब कुनै पंक्षीले यो औषधीको प्रयोग गरिएका पशुहरूको सिनो खान्छन्, ती पंक्षीहरुको मिर्गौला फेल हुन्छ र मर्छन् ।

State of India's Birds को नयाँ रिपोर्ट अनुसार सन् २००६ मा पशुहरुको उपचारमा प्रयोग हुने डाइक्लोफेनाक औषधिमाथि भारतमा प्रतिबन्ध लगाइएसँगै केही क्षेत्रहरुमा गिद्धको मृत्युमा गिरावट आएको छ । तर, कम्तीमा ३ वटा प्रजातीहरू यस्ता थियो जोमाथि यो औषधिको दीर्घकालीन असर पर्‍यो र ९१ देखि ९८ प्रतिशतसम्मको क्षति बेहोर्नु पर्‍यो ।

अमेरिकन इकोनोमिक एसोसिएसन जर्नलमा प्रकाशित अध्ययनमा भनिएको छ : ती गिद्धको मृत्युका कारणले घातक ब्याक्टेरिया तथा संक्रमण फैलियो । जसका कारण ५ वर्षमा करीब ५ लाख मानिसको मृत्यु भयो ।

अध्ययनका एकजना लेखक तथा शिकागो विश्वविद्यालयस्थित ह्यारिस स्कुल अफ पब्लिक पोलिसीका सहायक प्राध्यापक इयाल फ्रेंक भन्छन् - गिद्धले प्रकृतिलाई स्वच्छ राख्न र हाम्रो पर्यावरणबाट जिवाणु तथा रोगबाट मरेका जनावरहरु हटाउनमा महत्वपूर्ण भूमिका निभाउँछन् । गिद्धको अभावमा रोग फैलिन सक्दछ । मानिसको स्वास्थ्यमा गिद्धको भूमिकाले वन्यजन्तुको संरक्षणको महत्वलाई दर्शाउँछ ।

पर्यावरणमा सबै जिवहरुको आ आफ्नै काम हुन्छ, जसले हाम्रो जीवनलाई प्रभावित गर्दछन् ।

फ्रेंक र उनका सहकर्मी शोधकर्ता अनन्त सुदर्शनले गिद्धको संख्यामा गिरावट हुनुभन्दा अघि र पछि ऐतिहासिक रुपबाट गिद्धको संख्या कम भएका भारतीय जिल्लाहरू तथा गिद्धको संख्या धेरै भएका जिल्लाहरुमा मानवीय मृत्युको दरको तुलना गरे ।

उनीहरूले रेबिन खोपको बिक्री, जंगली कुकुरको संख्या तथा पानी आपूर्तिमा रोग फैलाउने कारकहरुको स्तरको अध्ययन गरे ।

त्यसक्रममा सुन्निएको उपचारमा प्रयोग हुने औषधिको बिक्री बढ्दा र गिद्धको संख्या घटेपछि ती जिल्लाहरु (जहाँ कुनै समय गिद्धको संख्या उच्च थियो) मा मानव मृत्युको दरमा ४ प्रतिशतभन्दा धेरैको वृद्धि देखियो ।

शोधकर्ताहरुका अनुसार पशुहरुको सिनो यत्रतत्र फ्याँकिने गाईवस्तुको संख्या बढी भएका सहरहरुमा यसको प्रभाव सबैभन्दा धेरै पाइएको थियो । शोधकर्ताहरुका अनुसार सन् २००० देखि २००५ सम्ममा गिद्धको संख्या घटेका कारणले हरेक वर्ष करिब एक लाखभन्दा धेरै मानिसको मृत्यु भयो । अकाल मृत्युका कारण भारतले हरेक वर्ष ६९ अर्ब डलरको क्षति ब्यहोर्नु पर्‍यो ।

कुनै प्रजाती नासिँदा मानिसमा के असर पर्छ ?

उल्लेखित मृत्युहरु यस्ता रोग तथा जिवाणुहरू फैलिएका कारण भएन, जसलाई आम रुपले गिद्धले पर्यावरणबाट टाढा राखिन्थ्ये ।

वास्तवमा गिद्ध नहुँदा भुस्याहा कुकुरहरुको सख्यामा बृद्धि भयो र मानिसमा रेबिज जस्ता रोगहरुको दर बढ्न पुग्यो । त्यसबेला रेबिज खोपको बिक्री बढ्यो, तर खोप पर्याप्त मात्रामा उपलब्ध थिएन ।

गिद्धले जस्तो कुकुरले सिनोका अवशेषहरू सफा गर्न सक्दैनथ्यो । जसका कारण सिनोमा भएका जिवाणुहरु खानेपानीका स्रोतसम्म पुगे । पानीमा त्यस्ता हानिकारक ब्याक्टेरिया मिसिंदा त्यसले मानव स्वास्थ्यमा गम्भीर असर पार्‍यो ।

वार्विक विश्वविद्यालयका सहप्राध्यापक तथा यस अध्ययनका सहलेखक सुदर्शन भन्छन् : भारतमा गिद्धको संख्यामा गिरावट आउनु वास्तवमा यो कुराको प्रष्ट उदाहरण हो कि कुनै प्रजाति नासिंदा मानिसले कति भारी तथा अप्रत्याशित मूल्य चुकाउनु पर्ने हुन्छ ।

उनी भन्छन्-यो मामिलामा नयाँ रसायनहरुलाई दोषी ठहराइयो । तर, अन्य प्राकृतिक बासस्थान विनास, वन्यजन्तुको अवैध व्यापार तथा जलवायु परिवर्तन जस्ता मानवीय गतिविधि सिर्जित घटनाले जीवजन्तुमा असर पारेका छ र अन्ततः त्यसले समग्र मानिसलाई नै प्रभाव पार्दछ ।

गाईवस्तुको सिनो हटाउनका लागि गिद्धमा निर्भर हुन्थे किसान

भारतमा सबैभन्दा ठुलो संख्यामा गिरावट आएका गिद्धका प्रजातीहरुमा सेतो प्वाँख भएको गिद्ध, भारतीय गिद्ध, लालसर गिद्ध लगायतका छन् ।

ती प्रजातीहरुले सन् २००० को दशकको सुरुवातदेखि सबैभन्दा महत्वपूर्ण दीर्घकालीन गिरावटको सामना गरे । ती गिद्धको संख्यामा त्यसदेखि अहिलेसम्म ९१ देखि ९८ प्रतिशतसम्मको गिरावट आएको छ ।

इजिप्सियन गिद्ध र ग्रिफोन गिद्धको संख्यामा पनि उल्लेख्य गिरावट आएको छ, तर त्यो धेरै विनाशकारी छैन ।

शोधकर्ताका अनुसार भारतमा सन् २०१९ को पशु गणनामा देशमा ५० करोडभन्दा धेरै पशु रहेको तथ्यांक छ । अर्थात् भारत विश्वमै सबैभन्दा धेरै घरपालुवा पशु भएको देश हो ।

विगतमा किसानहरुले पशुका शवलाई छिटो गरी हटाउनका लागि गिद्धमा निर्भर हुन्थे । तर, भारतमा गिद्धको गिरावट कुनै पनि पन्छी प्रजातिमा अहिलेसम्मकै सबैभन्दा तीव्र गिरावट मानिएको छ । जुन अमेरिकामा परेवा लोप भएपछिको ठुलो गिरावट हो । भारतीय चराहरूको अवस्थासम्बन्धी रिपोर्ट अनुसार भारतमा अहिले केवल संरक्षित क्षेत्रको आसपासमा मात्रै बाँकी गिद्ध छन् । त्यस क्षेत्रमा गिद्धको आहारको रुपमा दूषित घरपालुवा पशुको साटो मृत वन्यजीवहरू अधिक रहेका छन् ।

विज्ञका अनुसार गिद्धको संख्यामा निरन्तर गिरावटले गिद्धमाथि मडारिइरहेको खतरातर्फ संकेत गर्दछ, जुन गम्भीर चिन्ताको विषय हो । किनकि गिद्धको संख्यामा गिरावट आउँदा मानव कल्याणमा नकारात्मक असर पर्दछ ।

वास्तवमा पशुका लागि प्रयोग हुने डाइक्लोफेनाक औषधि नै गिद्धका लागि ठुलो खतरा बनेको छ । हालको समयमा मृत पशुलाई खुल्ला ठाउँमा नछाडी खाडलमा पुर्ने तथा जंगली कुकुरका कारण पनि यो समस्या थप गम्भीर बनेको छ । त्यसका अलावा खानी तथा उत्खनन पनि समस्या बनेको छ जसले गिद्धका कतिपय प्रजातीहरुलाई गुँड बनाउने काममा असर गर्दछ ।

उसोभए के अब गिद्धको पुनरागमन होला ? यो भनिहाल्न कठिन छ । तर, केही संकेतहरुले भने आशा जगाएका छन् ।

गतवर्ष २० वटा गिद्धलाई पालेर उनीहरुको खुट्टामा स्याटेलाइट ट्याग लगाई पश्चिम बंगालको एक बाघ आरक्षमा छाडियो । हालै भएको एक सर्भेक्षणले दक्षिण भारतमा ३ सय भन्दा धेरै गिद्ध रहेको देखाएको छ ।

तर, अझै पनि यो अपर्याप्त छ । गिद्धको संख्या बढाउनका लागि अझै पनि धेरै काम गर्नु आवश्यक छ । -बीबीसीबाट

# जापानी स्टार होन्डा नेपाल आउने

काठमाडौं । जापानी स्टार केसुके होन्डा यसै महिनाको अन्त्यमा दशरथ रंगशालामा हुने एएफसी च्यालेन्ज लिगको प्लेअफ खेलमा आउने भएका छन् । साउन २९ गते हुने च्यालेन्ज लिगको छनोटमा नेपालको लिग च्याम्पियन अपि पावर चर्च ब्वाइज युनाइटेड र भुटानको पारो फुटबल क्लब खेल्दैछन् । उक्त खेलका लागि पारोले जापानी मिडफिल्डर होन्डालाई अनुबन्ध गरेको हो । पारोले झन्डै एक दर्जन विदेशी खेलाडी अनुबन्ध गरेकोमा जापानी स्टार पनि नेपाल आउनेछन् ।

यसबाहेक गत सिजन नेपाल सुपर लिगमा एफसी चितवनबाट खेलेका डिफेन्डर मार्को इभानोभिच र बीरगंज युनाइटेडबाट खेलेका मिडफिल्डर विलियम ओपोकु पनि पारोमा छन् । भुटानका राष्ट्रिय टोलीका खेलाडी समेत रहेको टोलीको प्रशिक्षकमा पुष्पलाल शर्मा छन् ।

त्यस्तै खेलका लागि चर्च ब्वाइज र खल्तीबीच टिकटका लागि सम्झौता भइसकेको छ । साधारणतर्फ २ सय र भीआइपी तर्फ ५ सय रुपैयाँ टिकट दर रहेको छ । खेलको लागि खल्तीबाट टिकट खरिद गर्न सकिनेछ । चर्च ब्वाइजले दुई साताअघि देखि खेलका लागि तयारी सुरु गरिसकेको छ । अनन्त तामाङको कप्तानीमा रहेको टोलीमा लिग सिजनमा टोलीमा रहेका अन्जन विष्ट र एरिक विष्टले सम्झौता नविकरण गरेका छन् ।

गोलकिपर दीप कार्की, डिफेन्डर सनिश श्रेष्ठ, मिडफिल्डर लाकेन लिम्बु र फरवार्ड आयुष घलान पनि चर्च ब्वाइजमा आबद्ध भएका छन् । यसबाहेक क्लबले राष्ट्रिय टोलीका डिफेन्डर सौभाग्य राई, छिरिङ लामा तथा श्री स्टारबाट डिफेन्डर योगेश गुरुङसँगै मिडफिल्डर रोहन कार्कीलाई पनि अनुबन्ध गरेको छ ।

चर्च ब्वाइजले डिफेन्डर ओमोलाजा करीम र मिडफिल्डर पिटर बान्डासँगै केही विदेशी खेलाडीहरुको अनुबन्धका लागि पनि तयारी गरिरहेको बताइएको छ । बालगोपाल महर्जन टोलीको मुख्य प्रशिक्षक रहेका छन् । उनकै प्रशिक्षणमा चर्च ब्वाइजले लिग जितेको थियो ।

पारो विरुद्ध प्लेअफ खेल जितेमा चर्च ब्वाइज एएफसी च्यालेन्ज लिगको समूह चरण पुग्नेछ । प्ले अफ जित्ने टोलीले १ लाख अमेरिकी डलर प्राप्त गर्नेछ । एसियाली फुटबल महासंघ (एएफसी) ले बिहीबार एएफसी क्लब प्रतियोगिता संरचनाको परिमार्जित भागको रूपमा प्रतियोगिताको घोषणा गरेको थियो । प्रतियोगिताको समूह चरणमा १८ टोलीले प्रतिस्पर्धा गर्नेछन् ।

प्लेअफ खेलमा केल्मीको बल प्रयोग हुनेछ । नेपालको लागि केल्मीको आधिकारिक बिक्रेता कामारु ट्रेडिङले चर्च ब्वाइजलाई प्रतियोगिता र प्रशिक्षणका लागि आवश्यक म्याच बल उपलब्ध गराएको हो । केल्मी र एएफसीबीच सन् २०२१ देखि २०२४ सम्म एएफसीका प्रतियोगितामा केल्मीको सामग्री प्रयोग गर्ने सहकार्य रहेको छ । तर उक्त सहकार्य मुख्य प्रतियोगितामा मात्र लागु हुँदै आएको छ ।

कामारु ट्रेडिङले प्लेअफ चरण भएपनि चर्च ब्वाइजको प्रशिक्षणमा सहयोग पुग्ने हेतुले आवश्यक बल उपलब्ध गराएको हो ।

पछिल्लो सिजन दोस्रो तहको एएफसी कपको पहिलो चरणको छनोटमा नेपालको मछिन्द्र क्लबले पारो एफसीलाई नै रंगशालामा हराएको थियो । मछिन्द्र प्लेअफको दोस्रो खेलमा भने भारतीय टोली मोहन बगान विरुद्ध कोलकत्तामा पराजित भएको थियो ।

# रातो मच्छिन्द्रनाथको फूल–प्रसाद कीर्तिपुरको याक: मिसालाई हस्तान्तरण

काठमाडौं । बुंग्द्यः करुणामय रातो मच्छिन्द्रनाथको रथ श्रावण १७ गते बिहिवार लगनखेलबाट जावलाखेल तान्ने जात्रा हुने भएको छ । रथ तान्ने चार दिन अगाडि सोमबार १४ गते कीर्तिपुरको २ वडास्थित प्यंगःथामा रातो मच्छिन्द्रनाथको जलपानेजुको हातबाट याकःमिसालाई फूल-प्रसाद हस्तान्तरण गर्नुभएको थियो ।

फूल-प्रसाद हस्तान्तरणसँगै याकःमिसालाई गुठी संस्थान शाखा कार्यालय ललितपुरबाट प्रदान गरिने दरबन्दी रकम पनि हस्तान्तरण गरिएको थियो ।

मिति २०८० असोज २४ गते गुठी संस्थान शाखा कार्यालय ललितपुरले श्री याकः मिसा कवःलाई बोधार्थ गरी याकः मिसाको दरबन्दी कायम सम्बन्धमा पत्र पठाइएको थियो । उक्त दरबन्दी अनुसार सोमबार याकः मिसालाई फूल-प्रसादसँगै २०८० र २०८१ को दरबन्दी बापत रकम करिब ११ हजार चानचुन रुपैयाँ पनि चढाइएको थियो ।

गुठी संस्थान शाखा कार्यालय ललितपुर कार्यालय प्रमुख लछुना शर्मा काफ्लेद्वारा हस्ताक्षरित याकः मिसाको दरबन्दी कायम सम्बन्धको पत्रमा कीर्तिपुरको याकः मिसाको दरबन्दी कायम गर्ने सम्बन्धमा श्री रातो मच्छिन्द्रनाथको रथजात्रासंग सम्बन्धित याकः मिसाको निम्तित वार्षिक रु. ५५५५ (पाँच हजार पाँच सय पचपन्न)को दक्षिणा दरबन्दी कायम गरी प्रत्येक वर्ष याकः मिसालाई पानेजुले फूल-प्रसाद चढाउने दिनमा कार्यालयको प्रतिनिधि गई सो दक्षिणा दरबन्दी भएको रकम दिने र सो रकम दरबन्दी कार्यविधि बमोजिम दुई वर्षमा १० प्रतिशतले बढाउने गुठी संस्थान प्रधान कार्यालयको मिति २०८० भाद्र १ गतेको निर्णय भएकोले सोही अनुसारको व्यवस्था गरिने हुँदा सोही व्यहोरा जानकारीको लागि अनुरोध गर्दछु भनी उल्लेख गरिएको छ ।

ज्योतिषीहरुले हेरिएको शुभसाईत अनुसार श्रावण १७ गते लगनखेलबाट पश्चिमतर्फै रथ तानिने भएको छ । यसरी श्रावण १७ गते रथजात्रा गरी जावलाखेल पुऱ्याइसकेपछि चारदिन पछि श्रावण २१ गते भोटो जात्रा हुनेछ भने यसपछि यस बर्षको सम्पूर्ण रातो मच्छिन्द्रनाथको जात्रा समापन हुनेछ ।

वर्षा र सहकालको देवताको रुपमा पुज्दै आइरहेको ऐतिहासिक बुंग्द्यः करुणामय रातो मच्छिन्द्रनाथलाई ललितपुर पाटनको विभिन्न क्षेत्रमा परिक्रमा गराई जावलाखेल पुऱ्याई भोटो जात्रा गरी समापन गर्ने परम्परा र प्रचलन रही आको छ ।

विद्या, धन सम्पत्ति, शान्ति समृद्धिका साथ सम्पूर्ण बरदान मागे पनि आफ्नो रुप रंग राम्रो होस भनी बरदान माग्न नहुने संस्कृतिविदहरुको भनाई रहेको छ ।

रातो मच्छिन्द्रनाथ बुंग्द्यः करुणामयको रथजात्रा नेपालमा मनाइने जात्राहरुमध्ये यो नै सबभन्दा लामो जात्राको रुपमा लिइन्छ ।

रातो मच्छिन्द्रनाथको रथजात्रा बैशाख शुक्ल पूर्णिमाको दिन शुभारम्भ भई दुई महिनासम्म निरन्तर रुपमा मनाइने जात्रा हो । रातो मच्छिन्द्रनाथको रथजात्राको अन्तिम दिन भोटो जात्रा हो । पुल्चोकमा रथारोहण गरी शुभारम्भ हुने रथजात्रा गाःबहाल, मंगलबजार, लुँहिति (सुन्धारा), लगनखेल, इतिटोल हुँदै जावलाखेल पुऱ्याई भोटो जात्रा गर्ने परम्परा रही आइरहेको छ । भोटोजात्रा समापनपछि बुंगमतीका स्थानीय बासिन्दाहरु बाजागाजा सहित आई देवतालाई खतमा राखी मुख छाडी, छवालीप्वाः बाली बुंगमती लैजाने प्रचलन छ । यसपछि जात्रा समापन हुनेछ ।

एक रहस्यमय कुरा, रातो मच्छिन्द्रनाथको रथ पुल्चोकमा निर्माण गरिन्छ, पुल्चोकबाट नै सर्वप्रथम रथ तानिन्छ । तर पुल्चोकका बासिन्दाहरुले उक्त दिन जात्राको रुपमा लिइदैन । जब रातो मच्छिन्द्रनाथको रथ लगनखेलको इतितोलबाट जावलाखेल तानिन्छ, तब मात्र उक्त दिन पुल्चोकका बासिन्दाहरुले आफन्तहरुलाई निमन्त्रणा गरी जात्रा मनाइन्छ । इतिहास अनुसार पुल्चोकका बासिन्दाहरु पहिले कीर्तिपुर र सातगाउँबाट बसाइँ सरी आएका थिए । त्यसैले पुल्चोकका बासिन्दाहरुलाई "अतः गांमा" भन्ने पनि गरिन्छ । त्यस्तै, लगनखेलको इति टोलबाट रातो मच्छिन्द्रनाथको रथ तान्ने बेलामा कीर्तिपुरका साथै सातगाउँले बासिन्दाहरु बाजागाजासहित आई देवताको रथ तान्ने प्रचलन छ । उक्त दिनको जात्रालाई सातगाउँले जात्राको रुपमा लिने गरिन्छ भने कीर्तिपुरको जात्रा पनि भन्ने प्रचलन छ ।

पौराणिक भनाई अनुसार १२ वर्षसम्म अनिकाल भएको बखत भक्तपुरका तत्कालीन राजा नरेन्द्रदेवले यो जात्राको सुरुवात गरेको हो भन्ने किंवदन्ती छ ।

# श्रीलंका र माल्दिभ्सका खेलाडि नेपाल आइपुगे

काठमाडौं । काभा बुमन्स भलिवल नेसन्स लिगमा सहभागी हुन श्रीलंका र माल्दिभ्सका राष्ट्रिय महिला भलिबल टोली नेपाल आइपुगेका छन् । साउन १७ देखि २३ गतेसम्म दशरथ रंगशालामा चल्ने प्रतियोगिताका लागि दुई टोली मंगलबार दिउँसो काठमाडौं अवतरण गरेका हुन् । टोलीलाई नेपाल भलिबल संघका महासचिव रोशन श्रेष्ठसहित कार्यसमिति सदस्यको टोलीले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा स्वागत गरेको हो ।

५ राष्ट्र सम्मिलित प्रतियोगितामा नेपाल, इरान, भारत, श्रीलंका र माल्दिभ्स खेल्दैछन् । प्रतियोगितामा विशेष सहयोगीको रुपमा राष्ट्रिय खेलकुद परिषद् हस्पिलेटी पार्टनरमा होटेल एभरेष्ट, मेडिकल पार्टनरको रुपमा नेपाल नेसनल हस्पिटल एवं मिडिया पार्टनरको रुपमा हाम्रो खेलकुद रहेको बताइएको छ ।

७ दिन सम्म चल्ने प्रतियोगिताको पहिलो दिन नेपाल र श्रीलंका तथा इरान र भारतबीच खेल हुनेछ । नेपालले साउन १९ गते भार तसँग, साउन २० गते इरान र साउन २१ गते माल्दिभ्सको सामना गर्नेछ ।

राउन्ड रोबिन लिगपछि अंक तालिकाको पहिलो र चौथो तथा दोस्रो र तेस्रो बीच साउन २२ गते सेमिफाइनल हुनेछ । फाइनल र तेस्रो स्थानको खेल साउन २३ गते हुनेछ ।

## प्रतिनिधिसभा.......

(आइकाओ)ले नेपालको हवाई सेवामा नियामकीय र सेवा कार्य छुट्याउनुपर्ने माग गर्दैआएकामा त्यसो हुन नसकेको उनको भनाइ थियो । नेपाल नागरिक उड्डयन प्राधिकरणको नियामकीय भूमिकाबारे समेत सांसद बजगाईंले प्रश्न उठाए । नेपालको हवाई सेवा युरोपमा कालोसूचीमा रहेको विषय पनि उनले उठान गरेका थिए ।

सांसद सुनिता बरालले नेपालको हवाई सुरक्षामा जोखिम बढ्दै गएको विषय उठाइन् । एकपछि अर्को हवाई दुर्घटना हुँदा त्यसले पर्यटन क्षेत्रमा गम्भीर असर पार्ने उनको भनाइ थियो । नेपालले पर्यटन क्षेत्रमार्फत आर्थिक समृद्धिको परिकल्पना गरिरहेको बेला हवाई क्षेत्र असुरक्षित बन्दै जाँदा त्यसले नराम्रो सन्देश गइरहेको उनले बताइन् । सौर्य एयरलाइन्सको ब्ल्याकबक्सको विश्लेषणबाट दुर्घटना प्राविधिक कारणले भएको हो वा क्याप्टेनका कारण हो भन्ने थाहा हुने भएकाले जाँचबुझ समितिले त्यसलाई गम्भीर भएर हेर्नुपर्ने सांसद बरालले बताइन् ।

सांसद पूर्णबहादुर घर्तिले सौर्य एयरलाइन्सको जहाज दुर्घटना कसको कमजोरीका कारण भएको हो भन्नेबारे निष्पक्ष छानबिन गरिनुपर्ने बताए । देशका विभिन्न स्थानमा सडक अवरुद्ध हुँदा यातायात सञ्चालनमा कठिनाइ भइरहेको विषय पनि उनले संसदमा उठाए ।

राप्रपाका अध्यक्ष तथा सांसद राजेन्द्रप्रसाद लिङ्देनले दुर्घटनाग्रस्त सौर्य एयरलाइन्सको जहाज मर्मतसम्भारको सेवा काठमाडौँबाट दिन सकिन्थ्यो वा सकिन्थेन भन्ने प्रश्न गरे । गैरप्राविधिक र ठूलो संख्यामा कर्मचारी बोकेर उडेको उक्त विमानमा नियामक निकायले को-को जाँदैछन् भनेर समेत जानकारी नराखेकाबारे प्रश्न गरे ।

सांसद सञ्जयकुमार गौतमले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा ह्याङ्गर अभावका कारण जहाज मर्मतसम्भारका लागि पोखरा लैजानुपर्ने अवस्था आएको र सो क्रममा दुर्घटना भएको विषयमा सत्यता रहे-नरहेकोबारे प्रश्न गरे । नागरिक उड्डयन प्राधिकरणसम्बन्धी विधेयक संसदमा ल्याइनुपर्ने उनले माग गरे ।

सांसद महिन्द्रराय यादवले पूर्वराज्यमन्त्री रामचन्द्र रायको रहस्यमय ढङ्गले हत्या भएको विषय संसद्मा उठाउँदै सो प्रकरणको निष्पक्ष छानबिन गरिनुपर्ने माग गरे । साथै नेपाली आकाश हवाई यातायातका लागि असुरक्षित हुँदै गएकाप्रति चिन्ता व्यक्त गरे । सांसद सर्वेन्द्रनाथ शुक्लले सौर्य एयरलाइन्सको जहाज दुर्घटना र दुईवटा बस त्रिशूली नदीमा हराइरहेको विषय उठाए । लामो समयदेखि ग्राउन्डेड जहाज प्राविधिक रुपमा ठीक छ वा छैन भन्ने जाँच नगरीकन उडान अनुमति दिनु गम्भीर गल्ती भएको उनको भनाइ थियो ।

सांसद पूर्णबहादुर तामाङले सिन्धुपाल्चोकमा बाढी पहिरोमा परेर तीनजनाको मृत्यु भएको र मृतकका परिवारलाई राहतका लागि सरकारसँग माग गरे । जथाभावी सडक बनाउँदा वर्खायाम लागेपछि समस्या पर्ने र हिउँदमा फेरि वास्ता नगर्ने परिपाटी रहेको बताए । सांसद गणेश पराजुलीले नेपाल विद्युत् प्राधिकरणको हाइभोल्टेज तार व्यवस्थापन गर्न नसक्दा नागरिकले ज्यान गुमाउने गरेका तथा ढल र खानेपानीका पाइप व्यवस्थापन हुन नसक्दा सडक असुरक्षित बन्दै गएको विषय उठाए ।

त्यस्तै, नक्कली भूटानी शरणार्थी प्रकरणका आरोपीलाई पक्राउ गर्ने प्रहरी अधिकारीलाई सरकारले सरुवा गरेको उनको आरोप थियो । सांसद प्रभु साहले सौर्य एयरलाइन्सको जहाज दुर्घटनाले नेपालको हवाई क्षेत्र असुरक्षित छ भन्ने सन्देश गएको बताए । यसका लागि सम्बन्धित निकाय जिम्मेवार र जवाफदेही हुनुपर्ने उनको भनाइ थियो ।

सांसद हरि ढकालले चालु आर्थिक वर्षको मौद्रिक नीति निजी क्षेत्रमैत्री आएको उल्लेख गर्दै अघिल्लो सरकार र अर्थमन्त्रीलाई राष्ट्र बैंकले सहयोग नगरेको आरोप लगाए । बैठकको शून्य समयमा सांसदहरुले विभिन्न दुर्घटनामा जनधनको क्षति हुनु दुःखद् भएको उल्लेख गर्दै सौर्य एयरलाइन्स दुर्घटना र चितवनको सीमलतालमा भएको बस दुर्घटनामा निधन भएका नागरिकप्रति विभेद भएको भन्दै आपत्ति प्रकट गरे ।

सांसद अनिसा नेपालीले सौर्य एयरलायन्स दुर्घटनामा ज्यान गुमाउनेप्रति सरकारले श्रद्धाञ्जली दिए पनि सीमलताल बस दुर्घटनामा ज्यान गुमाउने नागरिकलाई स्मरणसमेत नगरेर सरकारले विभेद गरेकामा आपत्ति प्रकट गरे । सांसद अम्मरबहादुर थापाले देशभर भएका दुर्घटनाबाट ठूलो जनधनको क्षति भएको भन्दै सरकारले समस्या समाधानतर्फ कुनै चासो नराखेको गुनासो गरे । सांसद अमृतलाल राजवंशीले गत असार २८ गते बस दुर्घटनामा परी ज्यान गुमाउने र सौर्य एयरलाइन्स दुर्घटनाको उचित छानबिनको माग गरे ।

सांसद अर्जुननरसिंह केसीले भ्रष्टाचार नियन्त्रणका लागि निष्पक्ष र पारदर्शी छानबिनगरी जनतालाई आशा र भरोसा प्रदान गर्न माग गरे । सांसद अशोककुमार चौधरीले भ्रष्टाचार तथा अनियमितताको छानबिन गर्ने प्रहरी कर्मचारीलाई समयअगावै सरुवा गरिएकामा गुनासो गरे । सांसद असिम साहले सौर्य एयरलाइन्स दुर्घटनामा मानवीय तथा भौतिक क्षतिका अलावा मानवीय समवेदना पनि घाइते भएको बताए । सांसद ईश्वरी घर्तीले विद्युतीय कारोबारका कारण दैनिक जनजीवन सहज भए पनि पछिल्ला दिनमा अवैध धन्दा मौलाएकाले नियमन गर्न माग गरिन् ।

सांसद उर्मिला माझीले भुटानी शरणार्थी प्रकरणको छानबिनमा संलग्न उच्च प्रहरी कर्मचारीको समयअगावै सरुवा गरिएको भन्दै आपत्ति प्रकट गरिन् । सांसद एकनाथ ढकालले चालु आवको मौद्रिक नीतिले कर्जा विस्तार बढाउने र आर्थिक विकासलाई विशेष ध्यान दिनुपर्नेमा जोड दिए ।

सांसद कालुराम राईले राजधानी काठमाडौँको सडकपेटीको नाला खुला राख्दा दुर्घटनाको जोखिम बढेकामा सरकारको ध्यानाकर्षण गराए । सांसद किरणकुमार साहले पछिल्ला दिनका दुर्घटनाले नागरिकको सुरक्षामा सरकारले विशेष ध्यान दिनुपर्नेमा जोड दिए । सांसद गंगा कार्कीले नेपाल विद्युत् प्राधिकरणका कार्यकारी निर्देशकलाई विद्युत् महशुल उठाउनका लागि सहज वातावरण बनाइदिनुपर्ने बताए । सांसदहरु अमृता अग्रहरि, कुसुमदेवी थापा, गोमालाभ सापकोटा, चन्द्रकान्त भण्डारी, चन्द्रबहादुर विश्वकर्मा, छिरिङ डम्डुल लामा भोटे, जावेदा खातुन, जीवन परियार, जुली महतोलगायतले सौर्य एयरलाइन्सको जहाज दुर्घटनाले नेपालको आकाश असुरक्षित रहेको भन्ने विश्वव्यापी रुपमा सन्देश गएकामा सरकारको ध्यानाकर्षण गराएका थिए ।

## मध्यपुर थिमि....

बालिका गरी कुल १० हजार ३१५ जना बालबालिकालाई खोप लगाएको हो ।

नगरपालिकाको स्वास्थ्य शाखाका अनुसार वडा नं. १ को स्वास्थ्य चौकीबाट १ हजार ५२३, वडा नं. २ को शहरी स्वास्थ्य केन्द्र जातिगालबाट १ हजार ४२, वडा नं. ३ को शहरी स्वास्थ्य केन्द्र कौशलटारबाट १ हजार ९१६, वडा नं. ४ को स्वास्थ्य चौकी बालकुमारीबाट ८५६ र वडा नं. ५ को शहरी स्वास्थ्य केन्द्र भुलाँखेलबाट ५९६ जना बालबालिकालाई पोलियो विरुद्धको खोप दिईएको छ ।

यसैगरी वडा नं. ६ को थिमि स्वास्थ्य चौकीबाट ७४७, वडा नं. ७ को नगदेश स्वास्थ्य चौकीबाट १ हजार ६, वडा नं. ८ को शहरी स्वास्थ्य केन्द्र बोदेबाट ९१३, वडा नं. ९ को बोदे स्वास्थ्य चौकीबाट १ हजार २४३ र वडा नं. ९ कै शहरी स्वास्थ्य केन्द्र निकोशेराबाट ३४८ र अन्य १२५ जना बालबालिकाहरुलाई खोप दिईएको मध्यपुर थिमिको स्वास्थ्य शाखा प्रमुख श्रीकृष्ण प्रजापतिले जानकारी दिनुभयो ।

टुकुचा र बागमतीको दोभान नजिकको ढलको पानी परीक्षण गर्दा पोलियोको भाइरस पाइएपछि उपत्यकाका तीन जिल्लामा रहेका पाँच वर्षमुनिका सम्पूर्ण बालबालिकालाई पोलियो खोप दिने विशेष अभियान शुरु भएको हो ।

गत साउन ९ गतेबाट शुरु भएको अभियान साउन ११ गतेसम्म सञ्चालन हुने प्रजापतिले बताउनुभयो । अभियान अन्तर्गत मध्यपुर थिमिका ३१ हजार ९६६ घरधुरी, नगरभित्रका शिशु स्याहार केन्द्र, प्रि स्कुल, मण्टेश्वरी र विद्यालयमा समेत स्वास्थ्यकर्मी, विद्यालय नर्स, महिला स्वास्थ्य स्वयम सेविकाहरु पुगेर जन्मेको २ दिनदेखी ५ वर्ष मुनीका बालबालिकालाई खोजी खोजी पोलियो थोपा खुवाउने प्रजापतिले बताउनुभयो ।

## कमजोर......

विद्यालय र शारदा क्याम्पस माविमा कक्षा ११ अध्ययनको लागि भर्ना भएका नवआगन्तुक विद्यार्थीहरुको स्वागत तथा अभिमुखीकरण कार्यक्रममा अध्यक्ष बिजुक्छेंले विद्यार्थीहरुलाई प्रगतिशील राजनीति गर्न विद्यालय तहदेखि नै प्रेरित गर्नुपर्ने बताउनुभयो ।

अध्यक्ष बिजुक्छेँले युवा विद्यार्थीहरु अध्ययन र रोजगारीको सिलसिलामा विदेशिने क्रम झन्झन् बढ्दै गइरहेकोमा चिन्ता व्यक्त गर्दै सरकारले युवाहरुलाई स्वदेशमै रोजगारीको बन्दोबस्त नगरेसम्म युवाहरुको विदेशिने क्रमलाई रोक्न नसकिने बताउनुभयो ।

विद्यार्थीहरु विदेशिने क्रम बढेसँगै नेपालका कलेजहरु बन्द हुने अवस्थामा पुगेको बताउँदै उहाँले विद्यार्थीहरुलाई नेपालमै उच्च शिक्षा हासिल गरी देशकै लागि सेवा गर्न शिक्षकहरुमार्फत मार्गनिर्देशन गरिरहनुपर्नेमा जोड दिनुभयो ।

सो अवसरमा अध्यक्ष बिजुक्छेँले कलेजको प्रकाशन 'ख्वप जर्नल भाग ६' अनावरण गर्नुभएको थियो ।

कलेज व्यवस्थापन समितिका अध्यक्ष तथा भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले २०५६ सालमा स्थापना भएको ख्वप माविको जगमा हाल ८ वटा शैक्षिक संस्थाहरु सञ्चालनमा रहेको जानकारी दिँदैं विद्यार्थीहरुलाई योग्य र सक्षम बनाउने काममा ख्वप सर्कलका शिक्षण संस्थाहरुले निरन्तर पहल गरिरहेको बताउनुभयो ।

बागमती प्रदेश सभा सदस्य सुरेन्द्रराज गोसाइँले विद्यार्थीहरुले आफ्नो कमजोरी र बलियो पक्ष पहिचान गरी आगामी बाटो तय गर्नुपर्ने बताउनुभयो ।

कलेज सञ्चालक समितिका उपाध्यक्ष एवम् उपप्रमुख रजनी जोशीले शिक्षाकै माध्यमबाट समाजलाई बुद्धिजीवीकरण गर्न मद्दत पुग्ने बताउनुभयो ।

भक्तपुर नगरपालिकाका प्रमुख प्रशासकीय अधिकृत वसन्त भट्टराईले ख्वप सर्कल एउटा पृथक उद्देश्य लिएर अगाडि बढेको सामाजिक संस्था भएको बताउनुभयो ।

ख्वप कलेजका प्राचार्य प्रकाशकुमार श्रेष्ठले एसईईमा प्राप्त अंकलाई अझ उच्च राख्न मेहनतका साथ अध्ययन गर्न विद्यार्थीहरुलाई मार्गनिर्देश गर्नुभयो ।

ख्वप अस्पतालका निमित्त मेडिकल डाइरेक्टर डा. मजेशप्रताप मल्लले विद्यार्थी जीवनमा जति व्यापक दृष्टिकोणले अध्ययन गरिन्छ त्यसले विद्यार्थीको व्यक्तित्व विकासमा कालान्तारसम्म सहयोगी भूमिका खेलिरहने बताउनुभयो ।

ख्वप इन्जिनियरिङ कलेजका प्राचार्य इ. सुजन माकले विद्यालय तहमा गरिने मेहेनतले उनीहरुको भविष्य निर्धारण हुने बताउनुभयो ।

कार्यक्रममा ख्वप मावि र शारदा क्याम्पसका प्राचार्य लक्ष्मीप्रसाद कर्माचार्यले २०८१ मा ख्वप मावि र शारदा कलेजमा ५६ जिल्लाका १ हजार ६८० जना विद्यार्थीहरु भर्ना भएको तथ्यांक प्रस्तुत गर्नुभयो ।

प्रहरी निरीक्षक सानु श्रेष्ठले विद्यार्थीहरुलाई लागूऔषध दुर्व्यसन, साइबर अपराध र यौनजन्य अपराधलगायतका कुलतबाट टाढा राख्न अभिभावक र कलेजले आवश्यक सचेतना कार्यक्रमहरु आयोजना गर्नुपर्ने बताउनुभयो ।

उक्त कार्यक्रममा प्रा.डा. सिद्धिविर कर्माचार्यले सहिद स्मृति छात्रवृत्ति अक्षय कोष स्थापना गरी छात्रवृत्ति रकम रु. ४ लाख ४४ हजार ४४४ बराबरको छात्रवृत्ति रकम कलेजलाई हस्तान्तरण गर्नुभएको थियो ।

## मुस्ताङमा......

चराको अभिलेखमा प्रजाति थप गरिएको अध्यक्ष सुवेदीले बताए ।

धर्से अर्जुनकसहित नेपालमा चरा प्रजातिको सङ्ख्या आठ सय ९६ वटा पुगेका छन् । अर्जुनक प्रजातिको सङ्ख्या २४ पुगेको छ । नेपालबाट सबैभन्दा नजिक मङ्गोलिया, उत्तरी चीनको विभिन्न ठाउँ, पश्चिमतर्फ अफगानिस्तान, पाकिस्तानमा यो चरा पाइन्छ ।

जाडो याममा यिनीहरू नियमित रूपमा दक्षिणतिर बसाइँ सर्छन् । मुस्ताङमा भेटिएको यो चरा बसाइँसराइको क्रममा बाटोमा फिरन्ते रूपमा आइपुगेका हुन सक्ने अनुमान गरिएको चराविद् सञ्जय श्रेष्ठले बताए ।

'देशका लागि नयाँ चरा पहिचान गर्न सकेकामा खुसी लागेको छ,' वाइल्डलाइफ फोटोग्राफरसमेत रहेका श्रेष्ठले भने, 'यसले चरा पर्यटनमा लाग्न उत्साह थपिएको छ । चराका फोटो खिच्न उत्प्रेरित गरेको छ ।'

नेपाल बर्ड रेकर्ड कमिटीले नेपालमा नयाँ चराको अभिलेख राख्ने गर्दछ । श्रेष्ठले सन् २०२० मा मनोहरामा सेतोजुँगे बगेडी चरा मुलुकका लागि पहिलो पटक अभिलेख गरेका थिए ।

## वाढीपहिरोबाट......

जसबाट बालबालिकाको जिन्दगी नै बदलिएको छ ।

## भाषाको....

सभ्यतासँग कुनै मेल नखाएको पुष्टि गरेकी थिइन ।

कार्विन्सले आफ्नो किताबमा उल्लेख गरेअनुसार ढुंगा, हड्डी वा काठबाट एकातिरको भाग धारिलो बनाएर बनाइएको साना हतियार, ढुंगाका टुक्राहरु हजारौ संख्यामा भेटिएका थिए । ती हतियारहरुलाई ३० देखि ७० सेन्टिमिटर मुनि राता माटामा उत्खनन् गर्दा सजिलै भेटिएको उल्लेख छ । यस्तै अर्को रहस्य के थियो भने हतियारहरुको स्वरूप इण्डियामा मध्य पाषण युगमा पाइएका जस्ता थिएनन् । तिनीहरु भियतनाममा पाइएजस्ता भएकाले यहाँका मानवहरु इण्डियातर्फबाट आएको दाबी गरे पनि दक्षिणपूर्व तर्फबाट आएका थिए भन्ने संकेत गरेक पनि उल्लेख छ । मधेश प्रदेश होटल तथा पर्यटन व्यवसायी संघले

पर्यटकीय गन्तव्यहरुको खोजी गर्ने उदेश्यका साथ यहाँको अनुगमनमा प्रदेशका उद्योग, बाणिज्य तथा पर्यटन मन्त्री सकिल अलि मियाँले पनि पाटुको पुरानो मानव सभ्यताको विषयमा चासो लिएका छन् । पहिलो पटक नेपालमा रेकर्ड भएको १२५५ को शक्तिशाली भूकम्पलेसमेत यस क्षेत्रको चुरे पहाड १० फिट माथि उठेको तथ्यहरु फेला परेको छ । यस्ता विविध कारणले पनि यस ठाँउलाई मधेश कै पुरातात्विक केन्द्रको रुपमा विकास गर्न प्रयास गरिने मन्त्री मियाँले बताएका छन् ।

वर्ष १८ अङ्क ०३ २०८१ साउन १६ गते बुधबार
31 July 2024 Wednesday
इमेल: thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# 'रोधी' दृश्यले किचलोमा 'घर ज्वाइँ', मगर र गुरुङ बीच दोहोरी




काठमाडौं । मगर समुदायमा घर ज्वाइँ बस्ने परम्पराको कथामा आधारित फिल्म 'घर ज्वाइँ'फिल्ममा प्रयोग भएको 'रोधी'को दृश्यलाई लिएर केन्द्रीय कार्यालय पोखरा रहेको संस्था 'तमु धिँ नेपाल'ले आपत्ति जनाएको थियो । यो संस्था गुरुङ समुदायहरूको हो ।

पूर्वी रुकुमका मगर समुदायको कथा भन्ने दयाहाङ राई र मिरुना मगरको केन्द्रीय भूमिका रहेको फिल्ममा 'रोदी'संस्कृति देखाइएको छ ।

यस्तोमा उक्त संस्थाले रोधी गुरुङ समुदायको संस्कृति रहेको जिकिर गरेको थियो । फिल्ममा रोधी मगर समुदायको भनेर गरिएको दृश्यांकन विधि र विधानविपरीत भएको निष्कर्ष निकाल्दै तमु धिँले प्रदर्शन नगर्न पोखराको मिड टाउन मुभिज प्रालिलाई पत्र काटेको थियो ।

चलचत्रि जाँच समितिलाई पत्राचार गर्दा पनि न्यायिक निर्णय नभएकाले उक्त कदम चालेको पत्रमा उल्लेख थियो । यही विवादलाई निरुपण गर्ने क्रममा 'रोदी' मगर र गुरुङ दुवै समुदायको रहेको प्रष्टीकरण दिएको हो ।

फिल्म 'घरज्वाइँ'मा समावेश एक दृश्यलाई लिएर विवाद चर्किएको छ। यो विवाद चर्किंदै गर्दा पोखरास्थित गुरुङ समुदायको संस्था तमु धिं नेपालले स्थानीय एक हललाई पत्र लेख्दै अनिश्चितकालका लागि हल बन्द गरिदिन भन्दै चेतावनीसहितको पत्र लेखेको थियो ।

संस्थाका अध्यक्ष हुम गुरुङले मिडटाउन सिनेमाजलाई पत्र लेख्दै फिल्ममा समावेश रोधिं शब्द नहटाएसम्म वा संशोधन नगरेसम्म गण्डकी प्रदेशमा कुनै पनि फिल्म प्रदर्शन हुन नदिने चेतावनी दिएको छ।

तमु धिंको पत्रमा विवादित दृश्य हटाउन निर्मातालाई पटक-पटक भनिएको तर बेवास्ता गरिएको उल्लेख छ ।

यसैबीच, फिल्म 'घरज्वाइँ'को विवादबारे छलफल गर्न केन्द्रीय चलचित्र जाँच समिति (फिल्म सेन्सर बोर्ड)ले तमु धिं नेपाल र फिल्मका निर्माता-निर्देशकलाई छलफलका लागि बोलाएको थियो ।

नेपाल प्रज्ञा-प्रतिष्ठानले चलचित्र 'घरज्वाइँ'का कारण उत्पन्न 'रोदी'बारेको विवादमा मध्यमार्गी बाटो खोजेर समाधान दिएको छ। 'रोदी' शब्दको प्रमाणीकरण भन्दै प्रतिष्ठानका सदस्य सचिव डा. धनप्रसाद सुवेदीले नेपाल मगर संघलाई लेखेको एक पत्रमा यो संस्कृति मगर र गुरुङ दुवै समुदायमा रहेको जनाएका हुन् ।

मंगलबार नेपाल मगर संघका नाममा लेखिएको पत्रमा भनिएको छ, 'प्रज्ञा नेपाली बृहत् शब्दकोश (२०७९) मा 'रोदी' शब्दको अर्थ विशेषत : 'गुरूङ जातिमा प्रचलित छ' भन्ने उल्लेख भए पनि नेपाल प्रज्ञा-प्रतिष्ठानबाट प्रकाशित विभिन्न कृतिहरूका आधारमा हेर्दा उक्त 'रोदी' संस्कृति मगर, गुरुङलगायत पश्चिम नेपालमा बस्ने विभिन्न आदिवासी, जनजातिमा रहेको पाइएको व्यहोरा प्रमाणित गर्दछु ।'

# आँखामा समस्या भएपछि सर्जरी गर्न अमेरिका जाँदै शाहरुख

काठमाडौं । गत मे २१ मा भारतको अहमदाबादमा आयोजित आइपीएलको क्रममा अभिनेता शाहरुख खानलाई हिट-स्ट्रोक भयो । लगत्तै उनी अस्पताल भर्ना भए र भोलिपल्ट डिस्चार्ज गरियो ।

बलिउड हंगामको रिपोर्टअनुसार अभिनेता यतिबेला पुनः स्वास्थ्य समस्याले पीडित छन् । यसपटक भने उनको आँखामा समस्या देखिएको छ। जुलाई २९ मा मुम्बईको एक अस्पतालमा आँखाको सर्जरीको लागि उनी गए ।

तर, योजनाअनुसार त्यहाँ सर्जरी हुन सकेन । स्रोतले भन्यो- सुपरस्टारको आँखामा पुगेको क्षतिलाई कम गर्न र थप उपचारका लागि उनलाई अमेरिका लगिनेछ । उनी मंगलबार अमेरिका उड्ने जनाइएको छ ।

स्रोतले शाहरुखको आँखामा कस्तो समस्या भएको हो भन्ने त खुलाएन तर केही भारतीय संचारमाध्यमले शाहरुखको आँखामा मोतियाबिन्दु भएको हुनसक्ने समाचार लेखेका छन् ।



# बोक्सी कुप्रथाविरुद्धको फिल्म 'अग्निदहन' मंसिर ७ मा



काठमाडौं । बोक्सी कुप्रथाविरुद्ध सामाजिक सन्देश दिने फिल्म 'अग्निदहन'को प्रदर्शन मिति तय भएको छ । वर्षौं लामो पर्खाइपछि निर्माताले मंसिर ७ गते फिल्म रिलिज हुने घोषणा गरेका हुन् ।

राष्ट्रपति कार्यालयमा समेत प्रदर्शन गरिएको यो फिल्मलाई देशब्यापी च्यारिटी स्क्रिनिङ गरिएको छ । मंगलबार आयोजित समारोहमा संचार तथा सूचना प्रविधिमन्त्री पृथ्वीसुब्बा गुरुङले प्रदर्शन मिति समेटिएको फिल्मको पोस्टर सार्वजनिक गरे ।

मन्त्री गुरुङले बोक्सी कुपथ्राविरुद्ध फिल्म निर्माण हुनु सह्रानिय कार्य भएको बताए । 'बोक्सीको आरोपमा धेरै महिला मारिएका छन् । उनीहरुमाथि कुटपिट भएको छ, उनीहरुले आत्महत्या गरेका छन् । अझ भनौं अमानवीय कार्य नै भएको छ', उनले भने, 'नेपालमा बोक्सी प्रथाको अन्धविश्वास हटाउन ठूलो चुनौती छ । यो प्रथा हाम्रो शरीरमा रहेको पिलो जस्तै हो । त्यसलाई सबैले मिलेर फाल्नुपर्छ । त्यो अभियानमा यो फिल्म सफल हुन्छ भन्नेमा आशावादी छु ।' निर्देशक घनश्याम लामिछानेले डरलाग्दो विषयलाई फिल्ममा उठान गरिएको बताए । 'फिल्ममा थ्रिल, सस्पेन्स सबै छ । उपन्यासलाई हामीले सिनेम्याटिक तवरबाट फिल्ममा उतारेका छौं । फिल्ममा दर्शकले सन्देश र उत्सुकता दुवै पाउनुहुनेछ', उनले भने ।

'मान्छे कोही पनि बोक्सी हुँदैन' भन्ने सोचलाई देशव्यापी रुपमा अभियानको रुपमा अगाडि बढाउन फिल्म निर्माण गरिएको उनको लामिछानेको भनाइ छ ।

फिल्मका परिकल्पनाकार कोविदशरण उपाध्यायले फिल्मलाई तराईका जिल्लामा प्रदर्शन गराउनका लागि मैथिली र भोजपुरी भाषामा समेत डब गरिएको बताए । उनका अनुसार फिल्म अंग्रेजी भाषामा पनि सबटाइटल राखिएको छ । वितरक डीसीएनका अशोक शर्माले 'अग्निदहन' व्यावसायिक फिल्म नभएको बताए ।

वितरक शर्माले सामाजिक सन्देश समावेश यस्ता फिल्ममा सरकारको पनि सहभागिता हुन आवश्यक रहेको बताए । मान्छे




बोक्सी हुन्न कहिल्यै राष्ट्रिय जागरण प्रतिष्ठानका अध्यक्ष कोविदशरण उपाध्यायले समाजमा अहिले पनि बोक्सीको नाममा कुट्ने, पिट्ने जिउँदै जलाउने, मलमुत्र खुवाउनेलगायतका घटनाहरु घटिरहेको बताए ।

फिल्ममा प्रकाश घिमिरे, प्रमिला तुलाचन, माओत्से गुरुङ, अनुपमा भण्डारी, तुलसी क्षेत्री, विष्णु वास्तोला, ताराबहादुर गुरुङको अभिनय छ ।

फिल्मलाई निवर्तमान राष्ट्रपति विद्यादेवी भण्डारी, प्रधानमन्त्री केपी शर्मा ओली, निवर्तमान प्रधानमन्त्री पुष्पकमल दाहालले हेरिसकेका छन् । फिल्मलाई चलचित्र विकास बोर्डले 'विशेष चलचित्र अवार्ड' समेत दिइसकेको छ ।

# 'कल्ली'को टिजर पोस्टर सार्वजनिक




काठमाडौं । पल शाह र बेनिशा हमाललाई शीर्ष भूमिकामा लिएर लक्ष्मण सुनारले फिल्म 'कल्ली' निर्देशन गर्ने भएका छन् । यो फिल्म रेड बर्ड प्रोडक्सन र कस्तुरी प्रोडक्सनको ब्यानरमा निर्माण हुन लागेको हो ।

प्रस्तुतकर्तामा किरण नेपाली छन् । 'बुलाकी' फेम्ड सुनारको यो आगामी निर्देशकीय फिचर हो । महेश दवाडीको पटकथा तथा संवाद हुने प्रेषित विवरणमा उल्लेख छ ।

छायांकनअघि टिजर पोस्टर सार्वजनिक गर्दै फिल्मको घोषणा गरिएको छ । यो पोस्टरमा चरित्र चित्रणदेखि फिल्मको मुडसम्म चित्रण छ । पोस्टरअनुसार फिल्म एक्सनप्रधान हुने अपेक्षा गर्न सकिन्छ । पोस्टरमा पल र बेनिशा दुवैलाई एक्सन अवतारमा प्रस्तुत गरिएको छ । यी दुईले रजतपटमा पहिलोपटक सहकार्य गर्न लागेका हुन् । फिल्मको प्रदर्शन चैत २९ गते गर्ने जनाइएको छ ।

यो फिल्मको छायांकन कर्णाली प्रदेशका विभिन्न रमणीय स्थानमा गर्ने तयारी भइरहेको निर्देशक सुनारले जानकारी दिए । तिहारपछि फिल्मको छायांकन सुरु हुनेछ ।

दैनिक रुपमा समाचार हेर्नको लागि लग इन गर्नुहोस् ।
https://www.thimitimes.com.np/



प्रकाशक⁄कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web Portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

# THIMI TIMES WEEKLY



वर्ष १८ | अङ्क ०४ | ने.सं. ११४४ | साउन २३ गते बुधबार, २०८१ | 07 Aug. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## प्रधानमन्त्री ओली ३० औं विश्व आदिवासी दिवसको मूल समारोहमा सहभागी नहुने



काठमाडौं। नेपाल आदिवासी जनजाति महासंघले यही साउन २५ गते अर्थात अगस्ट ९ का दिन नेपाल प्रज्ञा प्रतिष्ठानको सभाहलमा मूल समारोह आयोजना गर्ने गरी ३० औं विश्व आदिवासी दिवस मनाउने तयारी पुरा गरेको जनाएको छ । सो कार्यक्रममा प्रधानमन्त्री केपी शर्मा ओली कार्यव्यस्थताका कारण समारोहमा सरिक हुन नसकेको खबर प्राप्त भएको नेपाल आदिवासी जनजाति महासंघका महासचिव दिवस राइले जानकारी गराएका छन् । तर नेपाल सरकारका उपप्रधानमन्त्री र मन्त्रीहरु भने मूल समारोहमा प्रमुख बक्ताका रुपमा सहभागी हुने जसमा उपप्रधानमन्त्री प्रकाशमान सिंह, सञ्चार तथा सूचना प्रविधि मन्त्री पृथ्वी सुव्व गुरुङ, रक्षा मन्त्री मान वहादुर राईलगायतको सहभागी हुने सुनिश्चित भएको भएको महासचिव राइले बताए ।

सोमबार महासंघको संघीय कार्यालयमा आयोजित पत्रकार सम्मेलनमा कार्यक्रमको तयारी लगभग पुरा भएको जानकारी दिएको थिया । उनले कार्यक्रमको रुपरेखाबारे जानकारी दिदै साँस्कृतिक झाँकी सहितको ऱ्याली ११ बजे भृकुटीमण्डपमा जम्मा भएर भद्रकाली, सुन्धारा,

बाँकी पेज ७ मा

## नेवार समूदायले मनाए गठामुंगः पर्व



भक्तपुर । साउन कृष्णपक्ष घण्टाकर्ण चतुर्दशीको अवसरमा शुक्रवार काठमाण्डौं उपत्यकालगायत देशका विभिन्न भागमा बसोबास गर्ने नेवार समूदायले शान्तिको कामना गर्दै घण्टाकर्णको पुजा गरी धुमधामले गठामुंगः पर्व मनाएका छन । साथै आफ्नो घर गृह शान्तिको कामना गर्दै आफ्ना परिवारलाई रोग व्याधी नलागोस भनेर घरघरबाट भुतप्रेत समेत मन्छाएका छन ।

विशेषगरी किसानहरुले गठामुंगः पर्वलाई वैशाख महिनामा पर्ने अक्षय तृतियाका दिन रोपाईंलगायतका बढी बल प्रयोग हुने कामका लागि सहयोग पुगोस् भन्ने उद्देश्यले तान्त्रिक विधिले आह्वान गरेर बोलाएका भूत, प्रेत, डाकिनी, शाकिनी, पिशाच आदिलाई

बाँकी पेज ७ मा

## समानुपातिक निर्वाचन कानुन संशोधन गर्न सर्वोच्चको आदेश

काठमाडौं । सर्वोच्चले अदालतले समानुपातिक निर्वाचन प्रणाली लक्षित वर्गको प्रतिनिधित्व सुनिश्चितता गर्न निर्वाचन कानुनमा यथोचित पुनरावलोकन गर्ने सरकारको नाममा निर्देशनात्मक आदेश जारी गरेको छ । वरिष्ठ अधिवक्ता बालकृष्ण न्यौपानेविरुद्ध प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय भएको रिटको पूर्णपाठ सार्वजनिक गर्दै सर्वोच्चले यस्तो निर्देशनात्मक आदेश जारी गरेको हो ।

२०८० फागुन ३० मा भएको फैसलाको पूर्णपाठ सार्वजनिक गर्दै सर्वोच्चले आउने चुनावअघि प्रतिनिधि सभा तथा अन्य तहका निर्वाचन सम्बन्धी कानुनहरू पुनरावलोकन गर्न निर्देशनात्मक आदेश दिएको छ ।

पछाडि परेका वर्गलाई निर्वाचित पदमा पुऱ्याउने गरी विभिन्न तहका निर्वाचन सम्बन्धी कानुनहरूको पुनरावलोकन गर्न सर्वोच्चले उक्त फैसलाको पूर्णपाठमा भनिएको छ । वरिष्ठ अधिवक्ता बालकृष्ण न्यौपानेले समानुपातिक निर्वाचनबाट निर्वाचित ११० सांसदहरू आर्थिक, सामाजिक र शैक्षिक दृष्टिले पछि परेका नभई आर्थिक रूपले सम्पन्न, उच्च शिक्षा हासिल गरेका, पटकपटक सांसद मन्त्री भएका, उच्च सामाजिक अवस्था भएका व्यक्तिहरू रहेकाले उनीहरूको नियुक्ति बदर गर्न माग गर्दै रिट दायर गरेका थिए ।

प्रधानन्यायाधीश विश्वम्भरप्रसाद श्रेष्ठ, न्यायाधीशहरू आनन्दमोहन भट्टराई, प्रकाशमान सिंह राउत, प्रकाश कुमार ढुंगाना र सुष्मालता माथेमाको संवैधानिक इजलासले यस्तो फैसला सुनाएको हो । आर्थिक रूपले सम्पन्न, उच्च

बाँकी पेज ७ मा

## नवदुर्गा मन्दिरमा भित्राइयो दशैंको खम्ये



भक्तपुर । भक्तपुरको प्रसिद्ध नवदुर्गा द्योछें (देवता घर)मा महिषासुरको प्रतीक मानिने खम्ये (निखर कालो राँगो) सोमबार भित्राइएको छ । भक्तपुरको कमलविनायक गच्छेंस्थित द्योछें (देवता घर) मा विजया दशमीका लागि आवश्यक महिषासुरको प्रतीक मानिने खम्ये भित्याइएको हो । खम्ये भित्राइएको यो मन्दिरमा प्रत्येक वर्ष विजया दशमीको दिन राष्ट्रप्रमुख (राष्टपति) दर्शनका लागि आउने चलन छ ।

भित्रिएको महिषासुररुपी राँगो नवमीसम्म द्योछेंमै पालेर राखिने छ । राँगोलाई प्रत्येक वर्ष घण्टाकर्ण चतुर्दशीदेखि नागपञ्चमीको वीचमा भित्राइन्छ । भित्राइएको राँगो व्यक्तिले पैसा हालिदिएर भित्राइन्छ । यसपल्ट भक्तपुरकै लक्ष्मीप्रसाद बनमालाले खम्ये चढाएका हुन् ।

बाँकी पेज ७ मा

## जिल्लाका एक दर्जन सरकारी कार्यालयमा महिलाको नेतृत्व




भक्तपुर । महिलाहरुलाई अहिलेसम्म पनि दोश्रो दर्जाको रुपमा हेरिने चलन नहटिरहेको बेला भक्तपुर जिल्लाका एक दर्जन सरकारी कार्यालयहरु महिलाहरुले नै नेतृत्व गरिरहेका छन् । जिल्लामा अहिलेसम्मकै सवैभन्दा वढी महिला कार्यालय प्रमुखहरु रहेको जिल्ला बनेको छ ।

जिल्ला प्रशाशन कार्यालयदेखि अस्पताल तथा अन्य सरकारी कार्यालयहरुमा दर्जन महिला हाकिमहरु रहेका छन् । प्रमुख जिल्ला अधिकारीदेखि भक्तपुर अस्पतालसम्म जिल्लाका ११ वटा सरकारी कार्यालयहरु महिला प्रमुखहरुले सम्हालिरहेका छन् ।

बाँकी पेज ७ मा

## एक महिना मनाईने "गुँलाधर्म" शुरु

भक्तपुर । नेवार समुदायका बौद्ध धर्मावलम्बीहरूले अति श्रद्धा र भक्तिका साथ मनाइने 'गुँलाधर्म' प्रतिपदा देखि भाद्र कृष्ण औँसीसम्म एक महिना मनाईने पर्व सोमवारबाट शुरु भएको छ । गुँलाधर्ममा एक महिनासम्म स्वयम्भू महाचैत्यलगायत अन्य धार्मिक स्थानमा बाजागाजासहित घुम्ने र पूजापाठ गर्ने चलन रहिआएको छ । यस वर्षको गुँलाधर्मको समापन भदौ १९ गते हुनेछ ।

गुँलाधर्म पर्वको अवसरमा विशेषगरी नौ बाजा बजाउने प्रचलन रहेको छ । गुँलाधर्म विशेषगरी बौद्धमार्गीहरुको पर्व भएता पनि पछिल्लो समय अन्य धर्मावलम्बीहरु समेत सहभागी हुने गरेको छ ।

संस्कृतिविद् डा. चुन्दा वज्राचार्यका अनुसार गुँलाधर्म पर्वमा बौद्ध स्तूपा, चैत्य, गुम्बा परिक्रमा गर्दै बुद्ध भगवानको ध्यान गर्ने परम्परा छ । दिनहुँ बिहान स्नान गरी बाजागाजासहित स्त्रोत पाठ गर्दै स्वयम्भू महाचैत्य, प्रतापपुर, अनन्तपुर र तीर्थस्थल परिक्रमा गर्ने प्रचलन रहेको उहाँ बताउनुहुन्छ ।

गुँलाधर्मको प्रमुख विशेषता धाः र न्याकुँ बाजा हो । जसलाई शृङ्गभेरी अर्थात् सिङ बाजा पनि भनिन्छ । न्याकुँ बाजा राँगा, भेडाको सिङबाट निर्माण गरिएको हुन्छ । पछिल्लो समय विभिन्न मौलिक बाजागाजा सहित गुँलाधर्म मनाउने प्रचलनमा बृद्धि भएको छ, जसअनुसार बाँसुरी बाजा, धिमे बाजा, भुस्या बाजा बजाएर पनि चैत्यहरुका साथै स्थानीय ईष्टदेवता, गणेश, भिमसेन भैरवलगायतका देवी देवताहरुको समेत परिक्रमा गर्ने प्रचलन बढेको पाइन्छ ।

नेवारी भाषामा 'गुँ' को अर्थ 'नौ' हो भने 'ला' को अर्थ 'महिना' भएकाले नेपाल संवतको नवौँ महिना अर्थात गुँलाथ्व पारुदेखि ञलाथ्व पारुसम्म एक महिना यो पर्व मनाउने गरिन्छ ।

गुँला अवधिका विशेष दिनमा विशेष ठाउँमा घुम्ने गर्दछन् । नागपञ्चमीका दिन भक्तपुरको चाँगुनारायण, जनैपूर्णिमामा पाटनको बगलामुखी साथै कृष्ण जन्माष्टमीमा काठमाडौँको स्वयम्भू, विजेश्वरी, शोभाभगवती, मरुगणेश, जनबहालस्थित सेतो मत्स्येन्द्रनाथ परिक्रमा गरिने चलन छ ।

त्यस्तै भक्तपुरको सूर्यविनायक, राममन्दिर, नवदुर्गा देवताघर, दत्रात्रय, पाँचतले मन्दिर, कमलविनायक परिक्रमा गरिने परम्परा छ । भने गुँलाको

बाँकी पेज ७ मा

## बङ्गलादेशका नियती, नेपालको लागि पाठ

काठमाडौँ । १५ वर्षसम्म बंगलादेशको शासनसत्ता रहेकी शेख हसिना अन्ततः आन्दोलनका कारण प्रधानमन्त्री पदबाट राजीनामा दिएर देश छाडेरै भागिन् । उनी अहिले भारतमा छिन् । करिब एक महिनादेखि आरक्षणको विषयलाई लिएर भइरहेको आन्दोलनले उग्र रूप लिएपछि थेग्न नसकेर उनी भाग्न बाध्य भइन् ।

हसिना लोकतान्त्रिक पद्धतिबाट सत्तामा आएकी हुन् । उनले सत्ता सम्हाल्नुअघि बंगलादेशमा निकै गरिबी थियो । त्यो गरिबीबाट हसिनाले नै देशलाई मुक्त गराएकी थिइन् । एक रिपोर्ट अनुसार उनले करिब दुई करोड जनतालाई गरिबीबाट बाहिर ल्याएकी छन् । देशको आर्थिक अवस्था सुधार्न उनले उत्तिकै महत्त्वपूर्ण भूमिका निर्वाह गरिन् । यहाँसम्म कि आर्थिक अवस्थाको मामिलामा बंगलादेशले भारतलाई समेत चुनौती दिन थालेको थियो । तर पछिल्लो समय त्यहाँ अराजकता, भ्रष्टाचार तथा विभिन्न बेथितिका कारण जनतामा असन्तुष्टि बढ्दै गइरहेको थियो ।

हसिना सरकारमाथि त्यहाँका जनताले असन्तुष्टि जनाइरहेका थिए । उनी निरङ्कुश बन्दै गएको भन्दै आलोचना बढ्न थाल्यो । तर त्यसलाई सम्बोधन गर्नुको सट्टा दबाउने प्रयत्नमा उनी लागिन् । हसिना सरकारले विपक्षीहरूलाई विभिन्न आरोप लगाएर थुन्न थाल्यो । सञ्चारमाध्यमलाई नियन्त्रणमा लिन थाल्यो । जनताबाट आएका विरोधका स्वरहरूलाई दबाउन थाल्यो ।

त्यहाँको अहिलेको आन्दोलन आरक्षणको मात्रै होइन, आरक्षणको मुद्दा लगभग मिलिसकेको थियो । हसिना सरकारमा मौलाएको बेथिति नै उनको शासन पतनको मुख्य कारण रहेको जानकारहरू बताउँछन् । बंगलादेशमा भएको आन्दोलन र शेख हसिना नेतृत्वको सरकारको पतनले नेपालमा कस्तो असर पर्ला भनेर टिप्पणी हुन थालेको छ । परराष्ट्र मामिलाका विज्ञ जयराज आचार्य भन्छन्, 'बंगलादेशकै जस्तो अवस्था नेपालमा हुँदैन भनेर भन्न

बाँकी पेज २ मा

# नगरकोटमा सञ्चालित शुक्रवारे हाटबजार शुरु भएको एक वर्ष पुरा

भक्तपुर । पर्यटकीय केन्द्र नगरकोटमा सञ्चालन भइरहेको शुक्रबारे हाट बजारको बार्षिकोत्सव मनाइएको छ । नगरकोटको पर्यटनका साथै व्यवसायलाई प्रवर्द्धन गर्न नगरकोटको मञ्जुश्री पार्कमा स्थानीय सरकार र व्यवसायीहरूको अगुवाइमा सुरू भएको हाटबजारले सफलताका साथ एक वर्ष पार गरेको उपलक्ष्यमा शुक्रवार वार्षिकोत्सव मनाइएको हो ।

नगरकोटमा आस्क नेपालको सहयोगमा हाटबजार सञ्चालनमा आएको हो । नगरकोटका सबै निकाय, पक्षसँग समन्वय र सहकार्य गरि थालनी गरिएको उक्त बजारले ३६५ दिन पार गरेको अवसरमा किसानका साथै होटल व्यवसायीहरूलाई सम्मानित गरेको छ । कार्यक्रममा उत्कृष्ट कृषक, उत्कृष्ट बिक्रेता र खरिदकर्ताहरुलाई प्रोत्साहन स्वरुप सम्मान गरिएको आयोजकले जनाएको छ ।

उनीहरूलाई मण्डनदेउपुर नगरपालिकाका नगरप्रमुख टोकबहादुर वाईबा, उपप्रमुख विष्णुमणि नेपाल, चाँगुनारायण नगरपालिका वडा नं. ६ का वडा अध्यक्ष धनबहादुर लामा र आस्क नेपालका प्रतिनिधिले कदरपत्रका साथ सम्मान गरेको थियो । वार्षिकोत्सबमा मण्डनदेउपुर नगरपालिकाका नगर प्रमुख वाइबाले किसानी पेशा अपमानित हुनुपर्ने अवस्थामा त्यसलाई न्यूनीकरण गर्नका लागि गरेको पहलले सार्थक रूप लिएको बताए ।

"किसान ठगिएका छन्, बिचौलियाको मारमा परेका छन्, त्यो समस्या समाधान गर्न हाट बजारले सहयोग गरेको छ । बिक्रेताले काठमाडौंकै मूल्यमा नगरकोटमै तरकारी पाएका छन्," उनले भने, "यो कामले किसानको सम्मान भएको छ ।" उनले किसानले उत्पादन गरेको तरकारी भण्डार गर्न नगरपालिकाले शीत भण्डार निर्माण गरेको जानकारी दिए । नगरकोट भ्रमण वर्ष २०८२ लाई सफल बनाउनका लागि आफू प्रतिवद्ध रहेको पनि नगरप्रमुख वाइबाले बताए ।

मण्डनदेउपुर नगरपालिकाका उपप्रमुख विष्णुमणि नेपालले हाटबजारले तरकारी र अन्न उत्पादन गर्ने किसानले उचित मूल्य पाउन नसकेको र उपभोक्ताले महङ्गोमा किन्नुपर्ने बाध्यता हटेको बताए । उत्पादन वृद्धिका लागि किसानलाई आर्थिक रूपमा आत्मनिर्भर गर्न जरुरी रहेको उल्लेख गर्दै उनले नगरपालिकाले चिस्यान केन्द्र सञ्चालनमार्फत पनि किसानका लागि काम गर्ने योजना रहेको बताए ।

कार्यक्रममा चाँगुनारायण नगरपालिका वडा नं. ६ का वडा अध्यक्ष धनबहादुर लामाले किसानलाई उत्प्रेरित गर्नका लागि हाटबजार सञ्चालन गरिएको बताए । उनले सो बजारलाई निरन्तरता दिने उल्लेख गर्दै घोषित नगरकोट भ्रमण वर्ष २०८२ लाई समेत टेवा पुग्ने बताए । मण्डन देउपुर पिसिएफ समितिका प्रेमप्रसाद तिमल्सिनाले आस्क नेपालले किसानको जीवनस्तर उकास्न सहयोग गरेको बताउँदै नगरकोटमा हाटबजार सुरू भएपछि किसानको बजारको समस्या हल भएको बताए । उनले तरकारी किनेर खाने किसानले समेत अहिले तरकारी उत्पादन गरि हाटबजारमा ल्याइ बिक्री गरेपछि तरकारी तथा अर्थमा आत्मनिर्भरता बढेको बताए । यो एक वर्ष चलेको हाट बजारबाट किसानले ७५ लाख रूपैयाँ आम्दानी गरेको उनको भनाइ थियो ।

आस्क नेपाल काभ्रेका शाखा प्रमुख बद्री माकले सबैको साथले हाटबजारले निरन्तरता पाएको जानकारी दिँदैं हाटबजारलाई थप व्यवस्थित गर्दै लग्ने र व्यावसायिक खेतीलाई प्राथमिकता दिने योजना रहेको बताए । मण्डनदेउपुर नगरपालिका, चाँगुनारायण नगरपालिका वडा नं. ६ र आपसी सहयोग केन्द्र (आस्क नेपाल) को संयुक्त आयोजना तथा पहलमा नगरकोटको मञ्जुश्री पार्कमा गत वर्ष २०८० साउन १९ गतेबाट सो हाट बजार सुरू गरिएको थियो । त्यसलाई मण्डनदेउपुर पिसिएस प्रमाणिकरण कृषक समूहले सहयोग गरेको थियो । हाटबजार साप्ताहिक रूपमा शुक्रबार विहान ३ घण्टा चल्ने गरेको छ ।

हाटबजारमा निरन्तर रूपमा तरकारी खरिद गरि बजार प्रवर्द्धनमा सहयोग गरेका होटल चौतारी, होटल ग्रिन भ्याली, होटल हिमालयन ग्लासियर, होटल भ्यू प्वाइन्ट, जिम्बु थकाली भान्सा घर, भिलेज भ्यू नगरकोट, माउन्ट एभरेष्ट , होटल मेरिगोल्ड, द फोर्ट रिसोर्ट, होटल सनसाइन र क्लब हिमालयनलाई सम्मान गरिएको थियो । साथै हाटबजारमा निरन्तर रूपमा तरकारी बेच्ने किसान र उत्कृष्ट किसानलगायतलाई सम्मान गरिएको थियो । प्राङ्गारिक खेती गरि उत्कृष्ट भएका किसानका साथै उत्पादनमा आधारित अनुदान पाएका किसानलाई पनि सम्मान गरिएको थियो ।

आस्क नेपालका अध्यक्ष रूकुमदत्त शर्मा पौडेल र आस्क नेपालका कार्यक्रम प्रमुख प्रल्हाद तिमल्सिनाले हाट बजारले ग्रामीण सशक्तीकरणमा टेवा पुगेको बताए ।

# साइनो वाङ्मय चौतारीको नेपालको पाँचौं वार्षिकोत्सव सम्पन्न

जयराम बिडारी

काठमाडौं । साइनो वाङमय चौतारी नेपालको पाँचौं वार्षिकोत्सवका अवसरमा बागवजार स्थित पद्मकन्या कलेजको डेनिस हलमा विशेष कार्यक्रमको आयोजना गरि सम्पन्न भएको छ ।

कार्यक्रमलाई सम्बोधन गर्दै प्रमुख अतिथि तथा नेपाल प्रज्ञा प्रतिष्ठानका कुलपति भूपाल राईले साइनो विविध भाषामा सिर्जना भइसकेको र यसले छोटो समयमै विश्वव्यापी स्थान बनाइसकेको हुँदा यसलाई नेपाली वाङ्मयमा स्थापित गर्नका लागि अझै परिष्कृत गर्न सके यसले विश्वका र नेपालका पनि विभिन्न भाषाभाषीका बीच द्रुत्तत्तर रुपमा विकास हुने, साथै साइनो वाङ्मय चौतारी, नेपालसँग नेपाल प्रज्ञा प्रतिष्ठान पनि सहकार्य गर्दै अघि बढ्ने चाहना रहेको विचार ब्यक्त गर्दै नेपाली साहित्यको श्रीबृद्धिमा साइनोले उल्लेखनीय भूमिका निभाउने बताए । ०७६ साउन १६ गते बाल साहित्यकार तथा साइनो प्रणेता डा. छायादत्त न्यौपाने 'बगर' ले फेसबुकमार्फत साइनो शीर्षक दिएर सात, आठ र नौ अक्षरको सिर्जना सार्वजनिक गरेको दिनलाई वार्षिकोत्सव अभियानका रुपमा मनाउन थालिएको पाँचौं वार्षिकोत्सवका अवसरमा आयोजित कार्यक्रममा प्रा.डा. रामप्रसाद ज्ञवालीले साइनो सर्जकहरुको सिर्जनात्मक क्षमता अभिबृद्धी हुँदै नेपाली जनजीवन, प्रकृति र माटोको सुगन्ध लिएर बिश्व साहित्यमा बलियो उपस्थिति जनाउन सफलता मिलोस् भन्ने शुभकामना ब्यक्त गरेका छन् ।

उक्त कार्यक्रममा सरिता पराजुलीकृत ' 'कविताञ्जली'' साइनो कवितसङ्ग्रह तथा शान्ता पन्थी 'शान्तिदीप'द्वारा सृजित ''प्रसून'' साइनो कवितसङ्ग्रह र साइनो वाङमय चौतारी नेपालबाट प्रकाशित ''साइनो कविताको सैद्धान्तिक स्वरूप'' गरी तीन कृति एकसाथ विमोचन गरिएको थियो । सरिता पराजुलीका यस अघि 'हातेमालो' तथा 'झुल्के घाम' बाल कविता संग्रह प्रकाशित भइसकेका छन् भने 'शान्तिदीपको' साइनो सौरभ, तथा साइनो चौतारी संयुक्त संग्रहका रुपमा प्रकाशित भइसकेका छन् ।

सोही अवसरमा कविताञ्जली कृतिबारे समीक्षात्मक टिप्पणी गर्दै डा.कौशिला रिसालले सकारात्मक सोच र ऊर्जाले भरिएका साइनो कवितासंग्रह पढिसक्ता शाब्दिक सामर्थ्यले सुवासित हुने बताउँदै परिस्कृत लेखनले साइनो पारखीहरुको ध्यान खिच्न सफलता मिलोस् भन्ने शुभकामना ब्यक्त गरिन् । यसैगरी शान्ता पन्थी शान्तिदीपको ''प्रसून'' बारे समीक्षात्मक टिप्पणी गर्दै अर्का समीक्षक देवी नेपालले साइनोले छोटो समयमै ब्यापकता पाएको उल्लेख गर्दै शान्तिदीपका साइनोहरुमा मानवीय समवेदना देशको आर्थिक, राजनैतिक, सामाजिक, सांस्कृतिक,र धार्मिक विषयवस्तुलाई कलात्मक रुपमा प्रस्तुत गरिएको बताउँदै परिस्कृत लेखनले साइनो पारखीहरुको ध्यान खिच्न सफलता मिलोस् भन्ने शुभकामना ब्यक्त गरे ।

प्राज्ञ डा.मधुसूदन गिरी, साइनो प्रणेता डा. छायादत्तदत्त न्यौपानेले शुभकामना मन्तव्य दिएका थिए । सोही क्रममा सर्जक शान्तिदीपले कार्यक्रम भव्यरुपमा सफल बनाइदिने सवैलाइ आभार व्यक्त गरिन् भने अर्की सर्जक सरिता पराजुली अकस्मात अस्वस्थ भएकीले उनका श्रीमान अच्युत पराजुलीले सर्जकको तर्फबाट मन्तव्य व्यक्त गरेका थिए । सो अवसरमा प्रथम साइनो कृतिकाा रुपमा प्रकाशित गर्ने तथा यसका उन्नयनमा निरन्तर क्रियाशील रहेका खेमलाल पोखरेल,हरिप्रसाद चौलागाईं तथा विष्णु पादुकालाई सम्मानित गरिएको थियो ।

यसैक्रममा साइनो अभियानका रुपमा जोडिएका २१ जना संस्थापक तथा आजीवन सदस्यहरुलाई प्रमुख अतिथिद्वारा आजीवन सदस्यताको प्रमाणापत्रसमेत प्रदान गरिएको थियो । प्रमुख अतिथि भुपाल राईले व्यानर पढेर समुद्घाटन गरेको सो कार्यक्रममा केशव ज्ञवालीले अभ्यागतहरुलाई स्वागत मन्तव्य व्यक्त गरेका थिए भने शेखर अर्यालले कार्यक्रम सञ्चालनका लागि सहजकर्ताको रूपमा भूमिका निभाएका थिए ।

## बङ्गलादेशको.......

सकिँदैन । अवस्था उस्तैउस्तै छ । आर्थिक र सामाजिक धेरै कुरा मेल खान्छ तर नेपालमा तत्कालै त्यस प्रकारको आन्दोलन हुँदैन ।'

बंगलादेशले हसिनाकै कार्यकालमा आर्थिक रूपमा राम्रो प्रगति गरेको हो । विकासका काम पनि भएका छन् । यति हुँदाहुँदै पनि त्यहाँका जनता असन्तुष्ट हुनुको मुख्य कारण सुशासनको अभाव नै रहेको आचार्य बताउँछन् । हसिनाले आफ्नो शक्तिको आडमा अलोकप्रिय काम गर्न थालेपछि जनतामा असन्तुष्टि बढ्दै यस्तो अवस्था आएको उनको भनाइ छ ।

नेपाली जनतामा पनि असन्तुष्टि बढ्न थालेको आचार्यले बताए । राजनीतिक दलका नेताहरूले जनतालाई डेलिभरी दिन नसकेको प्रस्ट पार्दै उनले बंगलादेशमा जस्तै यहाँ पनि राजनीतिक बेथिति रहेको बताए ।

सन् १९७१ मा स्वतन्त्रताको लडाइँ जितेको बंगलादेश १९७० मा आएको चक्रवातबाट निकै थलिएको थियो । बंगलादेशले कपडा उद्योगबाट सबैभन्दा बढी प्रगति गर्‍यो । सन् २००० बाट बंगलादेशको आर्थिक वृद्धि दर उच्च हुन थाल्यो । २०११ देखि जीडीपी विकास दर ६ प्रतिशभन्दा माथि नै हुन थाल्यो । तर पछिल्लो समय बंगलादेशमा बढ्दै गएको भ्रष्टाचार, अनियमितता, लोकतान्त्रिक मूल्य-मान्यता अनुसारको शासन अभाव जस्ता कारणले जनतामा असन्तुष्टि बढाउँदै गयो । बंगलादेशमा भएका कतिपय भ्रष्टाचार काण्डमा हसिनाको नाम पनि मुछिएको छ । उनका परिवारका सदस्य पनि त्यस्ता काण्डमा मुछिएका छन् । उनका पार्टीका कतिपय नेता यस्ता काण्डमा संलग्न रहेको भनेर नाम आउने गरेको छ ।

पूर्वराजदूत एवं परराष्ट्र मामिलाका जानकार विजयकान्त कर्णका अनुसार नेपालमा पनि कयौं नेता तथा उनीहरू निकटका व्यक्ति भ्रष्टाचारका काण्डमा मुछिएको बताउँछन् । 'शीर्ष नेताका आफन्तहरू, उनीहरूका नजिक रहने नेताहरू पनि भ्रष्टाचारमा मुछिएका छन्, कतिपय जेलमा पनि छन्,' उनले भने, 'त्यसले जनतामा निराशा उत्पन्न भएको छ । बेलैमा सम्बोधन नभए त्यो निराशा कुनै बेला विद्रोहमा परिणत हुन्छ र बंगलादेशजस्तै हालत हुन्छ ।'

भ्रष्टाचारका कारण नेपालको आर्थिक अवस्था दिनदिनै खस्किँदै गइरहेको, गरिबी बढ्दै गएको र बेरोजगारी तथा महँगी पनि बढ्दै गएको कर्णले बताए । त्यसले जनतामा छटपटाहट उत्पन्न भएको भन्दै उनले बंगलादेशमा पनि यस्तै अवस्था बढेर विद्रोहको रूप लिएको प्रस्ट पारे । 'लोकतान्त्रिक सरकारमात्र भएर हुँदैन । जनतालाई डेलिभरी दिन सकिएन भने जुनसुकै शासनलाई जनताले फ्याल्न सक्छन् भन्ने पछिल्लो उदाहरण बंगलादेशलाई लिन सकिन्छ,' कर्णले भने । बंगलादेशको घटनाले नेपालमा प्रत्यक्ष प्रभाव तत्काल नपार्ने तर यहाँका नेताहरूलाई त्यसले एउटा पाठ अवश्य सिकाएको उनको भनाइ छ । 'बंगलादेशको घटना नेपालका नेताहरूलाई सुध्रिने अवसर पनि हो,' उनले भने, 'सुध्रिएन भने ढिलोचाँडो बंगलादेशजस्तै अवस्था हुन्छ ।'

नेपालको राजनीति पनि दुईतीन शीर्ष नेताको सेरोफेरो रहेको भन्दै कर्णले यसबाट जनतामा बढ्दो असन्तुष्टि र निराशालाई बेलैमा नेताहरूले बुझ्न सक्नुपर्ने बताए । अर्का परराष्ट्र विज्ञ अरुण सुवेदीले बंगलादेशको आन्दोलन राजनीतिक तथा आर्थिक नभएर इस्लामिक फण्डामेन्टलले भएको बताए । 'सामाजिक र आर्थिक कारणले त्यहाँ आन्दोलन भएको होइन,' उनले भने, 'आर्थिक रूपमा बंगलादेश निकै बलियो छ । त्यहाँ ३ प्रतिशत जनतामात्र बेरोजगार छन् । आर्थिक वृद्धिदर पनि राम्रै छ । बेरोजगारी तथा आर्थिक अभावका कारण आन्दोलन भएको होइन ।'

तर त्यो आन्दोलनले नेपालमा शरणार्थी र आतङ्कारी गतिविधि बढ्न सक्ने चुनौती रहेको उनले बताए । बंगलादेशबाट विस्थापित हुनेहरू नेपाल आउनसक्ने भन्दै उनले यो अवस्थामा नेपालका लागि ठुलो चुनौती रहने बताए ।

# इजरायलले हमाससँग लडिरहेका सैनिकहरूबाट वीर्य संकलन गर्दै !




एजेन्सी । इजरायल र हमासबीचको युद्धमा हालसम्म ४० हजारभन्दा बढीले ज्यान गुमाएका छन् । जसमा करिब ७ सय इजरायली सैनिक पनि छन् । अब इजरायली सरकारले युद्धमा ज्यान गुमाएका आफ्ना सैनिकको वीर्य संरक्षण गरिरहेको छ । हालसम्म १ सय ७० युवाको शुक्रकीट ल्याबमा जम्मा भइसकेको छ । त्यसमा केही आम नागरिक पनि परेका छन् ।

मृत सैनिकको वीर्य किन निकालिन्छ ?

हमाससँग लड्दा ज्यान गुमाएका सैनिक वा नागरिकबाट शुक्रकीट निकाल्नुको उद्देश्य भविष्यमा यसबाट सन्तान जन्माउन सकोस् भन्ने हो । इजरायल टाइम्सको रिपोर्ट अनुसार, एक सैनिकको मृत्यु पछि, सेनाले तुरुन्तै उसको परिवारका सदस्यहरूलाई जानकारी दिन्छ र उनीहरूलाई शुक्रकीट प्राप्त गर्न चाहनुहुन्छ कि भनेर सोध्छ । परिवारको लिखित सहमतिपछि वीर्य निकासी गरिन्छ । हालैका महिनाहरूमा, शुक्रकीट पुनः प्राप्ति गर्ने परिवारहरूको संख्या द्रुत रूपमा बढेको छ ।

शुक्रकीट पुनः प्राप्तिबाट गुज्रिरहेका परिवारहरूमध्ये अवि हारुसको परिवार पनि छ, जो अप्रिलमा हमाससँग लड्दै मारिएका थिए । हारुस २० वर्षका मात्र थिए । न त उनको विवाह नै भएको थियो न त उनको कुनै प्रेमिका नै थियो । जब इजरायल रक्षा बलहरूले हारुसको परिवारलाई क्उबचकज सुरक्षित राख्ने विकल्प दिए, तिनीहरू तुरुन्तै त्यसो गर्न सहमत भए । यद्यपि उसलाई त्यो वीर्य के गर्ने थाहा थिएन । बीबीसीको रिपोर्टका अनुसार पछि जब हारुसको कथा सामाजिक सञ्जाल मार्फत बाहिर आयो तब धेरै इजरायली महिलाहरु त्यो वीर्यबाट हारुसको बच्चा जन्माउन अगाडि आएका थिए ।

वीर्य पुनः प्राप्तिसँगै इजरायलमा विगत केही महिनादेखि एउटा अभियान पनि तीव्र गतिमा अघि बढिरहेको छ । यसको उद्देश्य युद्धमा ज्यान गुमाएका सैनिकहरूको शुक्राणुबाट नयाँ जीवन दिनु हो । यो अभियानले यस सम्पूर्ण प्रक्रियाप्रति जनताको स्वीकृति पनि बढाएको छ ।

मृत्यु पछि वीर्य कसरी निकालिन्छ?

बीबीसीको एक रिपोर्टका अनुसार जसको शुक्रकीट मृत्युपछि निकाल्ने हो, उनीहरुको अण्डाशयमा चीरा बनाइन्छ र त्यसबाट कोशिकाको सानो भाग निकालिन्छ । त्यसपछि जीवित शुक्रकीट कोशिकाहरू त्यहाँबाट हटाइन्छ र प्रयोगशालामा जम्मा गरिन्छ । यो सम्पूर्ण प्रक्रिया मृत्यु भएको २४ घण्टा भित्र मात्र सम्भव हुन्छ । यदि कोशिकाहरू मृत्यु भएको २४ घण्टा भित्र हटाइयो भने, तिनीहरू भविष्यमा प्रयोग गर्न सकिन्छ ।

किन यहूदी रब्बीहरू यसको विरुद्धमा छन् ?

इजरायलमा वीर्य पुनः प्राप्तिको सन्दर्भमा अर्को बहस पनि सुरु भएको छ । त्यो मृतकको स्वीकृति हो । धेरै यहूदी रब्बीहरू विश्वास गर्छन् कि मृतकको शुक्राणुसँग उसको सहमति बिना पुनः उत्पादन गर्नु यहूदी सिद्धान्तहरू विरुद्ध हो । यस विषयमा आन्दोलन पनि भएको छ । सन् २०२३ मा, इजरायली संसदले शुक्रकीट पुनः प्राप्ति मार्फत प्रजनन सम्बन्धी कानून बनाउने प्रयास गर्‍यो । विधेयकको मस्यौदा पनि तयार भयो तर अघि बढ्न सकेन ।

अरु के हो विवाद ?

यो सम्पूर्ण प्रक्रियाको बारेमा धेरै शंकाहरू छन् । उदाहरणका लागि, यो प्रक्रियाबाट जन्मने बच्चाले सेवाका क्रममा मृत्यु भएका अन्य सैनिकका छोराछोरीले पाउने सबै सुविधा पाउँछन् कि पाउदैनन् भन्ने शंका धेरै विज्ञहरू बताउँछन् । इजरायल सरकारले पनि यस विषयमा अहिलेसम्म कुनै स्पष्ट नीति सार्वजनिक गरेको छैन ।

# बालकुमारी बचतले रजत महोत्सव सप्ताहव्यापी रुपमा मनाउने



भक्तपुर । मध्यपुर थिमिको शंखधरचोक स्थित बालकुमारी वचत तथा ऋण सहकारी संस्था लिमिडेटले संस्थाको रजत महोत्सव यही भाद्र २७ गते विहीबारदेखि सप्ताहव्यापी रुपमा विभिन्न कार्यक्रम गरी मनाउने मंगलबार पत्रकार सम्मेलन गरी जानकारी गराएको छ । कार्यक्रममा संस्थाले रजत समारोहको लागि लोगोसमेत सार्वजनिक गरेको थियो। संस्थाका अध्यक्ष तुइलाल श्रेष्ठको सभापतित्वमा सम्पन्न भएको कार्यक्रममा संचारकर्मीका जिज्ञासाको उत्तर दिदै संस्थाका सचिव पृथ्वीराम श्रेष्ठको हस्ताक्षर सहित प्रेस विज्ञप्तिसमेत जारी गरेको छ । जसको पूर्ण पाठ यस प्रकार रहेको छ ।

"आर्थिक, सामाजिक तथा साँस्कृतिक उन्नतिका लागि सहकारीताको भावनालाई जगाऔं" भन्ने मूल नारा बोकी २०५७ असोज २ गते, मध्यपुर थिमिका बिभिन्न क्षेत्रमा आवद्ध स्थानीय २८ जना महानुभावहरुले तत्कालिन जिल्ला सहकारी कार्यालय भक्तपुरमा दर्ता गरी बालकुमारी बचत तथा ऋण सहकारी संस्था लिमिटेड स्थापना गरेको थियो । यो संस्था समुदायमा आधारित सदस्यमैत्री सहकारी संस्था हो ।

७ लाख रुपैया पूँजी राखी संचालन गरेको यस संस्थाले आ.व. २०८०/०८१ असार मसान्तसम्म शेयर पूँजी रु. १३,७०,९७,८००।-, बचत रु. १,७८,५८,८४,६३०।-, ऋण लगानी रु. १,३६,७६,५७,४१५।-, जगेडाकोष तथा अन्य कोष रु. ८,३९,८८,८२०।- र तरलता रु. ६१,४८,८७,८३८।- (३४.४३%) रहेको छ। संस्थाको कुल कारोबार रु. २,१३,८८,२०,०४१।- रहेको जानकारी गराउन चाहन्छौं । संस्थामा असार मसान्तसम्म सदस्य सदस्य संख्या

संस्था स्थापनाकालदेखि बचत तथा ऋणको वित्तिय कारोबार मार्फत सदस्यको आर्थिक विकासका साथै समुदाय केन्द्रीत बिभिन्न कार्यक्रमहरु संचालन गर्दै आएका छौं । सदस्यहरुको लागि सहकारी शिक्षा, वित्तिय साक्षरता, उद्यमशिलता विकास, नेतृत्व विकास, व्यवसायिक तालिम तथा अभिमुखीकरण कार्यक्रम, सामुदाय केन्द्रित वित्तिय साक्षरता, रक्तदान, वृक्षारोपण, सरसफाई, सांस्कृतिक (कला संस्कृति) क्षेत्रको जगेर्ना एवं संरक्षणका लागि भौतिक तथा आर्थिक सहयोग, स्वास्थ्य शिविर तथा अभिमुखीकरण कार्यक्रम, हाजिरि जवाफ प्रतियोगिता, वक्तृत्वकला, प्रतियोगिता, निबन्ध प्रतियोगिता, नृत्य प्रतियोगिता, चित्रकला प्रतियोगिता लगायतका कार्यक्रमहरु निरन्तर भइरहेको यहाँमा अवगत नै छ ।

आफ्नै भवनबाट सदस्यहरुको जीवनस्तर उकास्न नीति, विधि र प्रविधि लागु गरी शुभारम्भदेखि सहकारी मूल्य, मान्यता तथा सिद्धान्तलाई आत्मसात गर्दै सहकारी ऐन, सहकारी नियमावली, संस्थाको विनियमावली, आन्तरिक नीति तथा कार्यविधि अनुसार बचत तथा ऋणको पूर्ण सुरक्षाको प्रत्याभूति दिलाई सदस्य तथा समुदायलाई वित्तिय सेवा प्रदान गर्दै आइरहेका छौं । भक्तपुर जिल्लामा समुदायमा आधारित सहकारी संस्थाको छुट्टै पहिचान स्थापित गर्न बालकुमारी साकोस सफल भएको छ। 'समुदायको पहिलो रोजाई, सुरक्षित र उत्कृष्ट बालकुमारी' नारा तय गरी गत साधारणसभाबाट ४ वर्षे रणनीतिक आयोजना निर्माण गरी सदस्यहरुलाई थप सेवा तथा प्रतिफल दिन संस्था अगाडि बढेकोको छ ।

यसै गरी संस्थाले राष्ट्रिय तथा अन्तर र्राष्ट्रिय सभासम्मेलन, गोष्ठी, प्रभातफेरी, प्रतियोगिताहरुमा सक्रिय सहभागिता जनाई सहकारी अभियानलाई दिगो बनाउन महत्वपूर्ण भूमिका खेल्दै आएको छ भने नियामक निकायबाट बिभिन्न समयमा दिने नीति, निर्देशन, मार्गनिर्देशनलाई पूर्ण पालना गरी संस्थालाई अझ बढी मजबुत र सदस्यको बचतको पूर्ण सुरक्षाका साथ सुरक्षित लगानी गरी निरन्तर अगाडि बढेका छौं ।

बालकुमारी साकोसले यस अवधिमा सहकारी अभियानमा पुऱ्याएको योगदानको कदर गरी २०६७ सालमा डिभिजन सहकारी कार्यालय भक्तपुरले जिल्लाकै उत्कृष्ट पुरस्कार प्रदान गरेको थियो। राष्ट्रिय सहकारी बैंक लि.ले २०७३ सालमा बैंकको १३ औं साधारणसभामा उपत्यकाको सहकारीहरु मध्ये उत्कृष्ट क्षेत्रीय पुरस्कार प्रदान गरेको थियो । भक्तपुर जिल्ला बचत तथा ऋण सहकारी संघ लि.ले सहकारी दिवसको अवसर आयोजित प्रभातफेरी कार्यक्रमहरुमा सहभागी भए बापत निरन्तर उत्कृष्ट सहभागिता पुरस्कार प्राप्त गर्न सफल भइरहेको छ । संस्थाले स्थापनाकालदेखि रक्तदान कार्यक्रमलाई निरन्तरता दिई मानवीय सेवामा पुऱ्याएको योगदानको कदर स्वरुप नेपाल रेडक्रस सोसाइटी भक्तपुरले २०७६ र २०८१ संस्थालाई समानित गरिसकेको जानकारी गर्दछौं । जिल्ला सहकारी संघ लि. भक्तपुरले २०७८ मा यस संस्थाका अध्यक्ष तुईलाल श्रेष्ठलाई मध्यपुर थिमि क्षेत्रको बचत तथा ऋण सहकारीहरु मध्ये उत्कृष्ट अध्यक्षबाट पुरस्कृत गरेको थियो। यस्तै बिभिन्न स्थानीय संघ संस्थाहरुबाट बालकुमारी साकोसले कदरपत्र तथा प्रशंसापत्रहरुबाट समानित भइसकेको जानकारी गर्दछौं ।

अत: यस संस्थाको २५ औं स्थापना दिवस तथा रजत महोत्सव-२०८१ सप्ताहव्यापी रुपमा मनाउन गइरहेका छौं । उक्त सप्ताह व्यापी कार्यक्रम निम्न अनुसार तय भएको यहाँ उपस्थित पत्रकार तथा संचारकर्मीज्यूहरुमा जानकारी गराउन पाउँदा हामी हर्षित छौं ।

रजत महोत्सव सप्ताहव्यापी कार्यक्रम

१) २०८१ भाद्र २७ गते, बिहीबार : वित्तिय साक्षरता कार्यक्रम र सदस्य बृद्धि कार्यक्रम

२) २०८१ भाद्र २८ गते शुक्रबार : भक्तपुर जिल्ला व्यापी चित्रकला प्रतियोगिता

३) २०८१ भाद्र २९ गते, शनिबार : खुल्ला रक्तदान कार्यक्रम, शंखधर चोक थिमि

४) २०८१ भाद्र ३० गते, आइतबार : बृद्धाश्रम तथा मानवविद्यागृहमा खाना/खाजा खुवाउने वा भौतिक सामाग्री वितरण

५) २०८१ भाद्र ३१ गते, सोमबार : सरसफाई कार्यक्रम

६) २०८१ असोज १ गते, मंगलबार : रजत महोत्सव २०८१ प्रभातफेरी कार्यक्रम

७) २०८१ असोज २ गते, बुधबार : २५ औं स्थापना दिवस तथा रजत महोत्सव-२०८१ समारोह बालकुमारी रजत महोत्सव प्रकाशन/सम्मान/पुरस्कार

१) बालकुमारी रजत स्मारिका २०८१ प्रकाशन गर्ने

२) एकापट्टी संस्थाको लोगो र अर्को पट्टी लक्ष्मी अंकित चाँदीको सिक्का (स्मारिका) प्रकाशन गर्ने ।

३) संस्थापकहरुलाई चाँदीको तक्मा सहित दोसल्लाह ओदाई सम्मान गर्ने ।

४) पूर्व संचालक समिति तथा लेखा सुपरीवेक्षण समितिमा रही योगदान गरेका संचालकहरुलाई सम्मान गर्ने ।

५) रक्तदान तथा प्रभातफेरी कार्यक्रमको लागि टि-शर्त प्रदान गर्ने ।

आजको मितिसम्म पनि संस्थालाई समयसापेक्ष सल्लाह, सुझाव दिनुहुने सम्पूर्ण आदरणीय शेयर सदस्य, संघीय, प्रदेशीय र स्थानीय नियामक निकायहरु, राष्ट्रिय सहकारी महासंघ नेपाल लि., नेफ्स्कुन, प्रोस्कुन, जिल्ला सहकारी संघ भक्तपुर, भक्तपुर जिल्ला बचत तथा ऋण सहकारी संघ लि., सम्पूर्ण शेयर सदस्य तथा शुभेच्छुकहरु, संचारकर्मी एवं पत्रकारज्यूहरु प्रति हामी हार्दिक आभार व्यक्त गर्न चाहन्छौं ।

# सिद्धार्थ सहकारीको स्थापना दिवसमा विभिन्न कार्यक्रम



भक्तपुर । सिद्धार्थ बचत तथा ऋण सहकारी संस्था लि.ले को १६ औं स्थापना दिवसको अवसर पारेर कलेजो रोग तथा नाक ,कान,घाँटी र हार्ड जोर्नी को स्वास्थ्य परिंक्षण कार्यक्रम सम्पन्न गरेको छ । जम्मा ९८ जना बिरामीको स्वास्थ्य परिक्षण गगरेको संस्थाका सचिव सोहन कायस्थले जानकारी दिए । कार्यक्रममा शिक्षा उपसमितिका संयोजक चन्द्रकृष्ण श्रेष्ठले स्वागत गरेको कार्यक्रममा संचालक समितिका जेष्ठ सदस्य बाबुकाजी श्रेष्ठले पानसमा दिप प्रज्वलन गरि उदधाट्न गरेको थियो ।

कार्यक्रम संस्था अध्यक्ष राजेश श्रेष्ठको सभपतित्वमा सम्पन्न भएको थियो। कार्यक्रम माथी प्रकाश पार्दै संस्थाले सामाजिक दायित्व खन्तर्गत सदस्य केन्द्रीत विविध बिषयमा कार्यक्रम गर्दै आएको जानकारी दिए ।

उक्त स्वास्थ्य परिक्षण कार्यक्रममा कलेजो रोग विशेषज्ञ डा.अनिल शंखदेवबाट कलेजो रोग सम्बन्धि सचेतना कक्षा संचालन भएको थियो । त्यस्तै हार्डजोर्नी विशेषज्ञ डा.योगेश कायस्थ र नाक ,कान र घाँटी विशेषज्ञ डा.आयुषी श्रेष्ठले पनि स्वास्थ्य परिक्षण कार्यक्रममा सदस्यहरुको स्वास्थ परिक्षण गरेको थियो ।

कार्यक्रममा संस्थाका संचालक समिति .लेखा समिति ,विभिन्न समिति उपसमितिलगायत कर्मचारीहरु, पत्रकारहरु, शुभेच्छुकको सहभागिता रहेको थियो । संस्थाले १६ औं स्थापना दिवस विभिन्न कार्यक्रम गर्दै साताव्यापी रुपमा मनाउने तयारीमा रहेको पनि अध्यक्ष श्रेष्ठले जानकारी दिए ।

# इसानद्वारा विद्यार्थी, शिक्षक र कर्मचारी सम्मान




भक्तपुर । संस्थागत विद्यालय सङ्घ नेपाल (इसान)ले विद्यार्थी, शिक्षक तथा कर्मचारीलाई सम्मान कार्यक्रम गरेको छ । इसानको आयोजनामा एसईई २०८० मा विद्यालयगत रुपमा उत्कृष्ट विद्यार्थी, १५ वर्षभन्दा बढी निरन्तर सेवारत विद्यालय व्यवस्थापन समिति अध्यक्ष तथा शिक्षक एवम् कर्मचारीलाई सम्मान गरेको हो ।

नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छेंले सम्मान गरेको कार्यक्रममा उनले शिक्षा, शिक्षक, राजनीतिक दल, विद्यार्थीको भूमिकाबारे चर्चा गरेका थिए ।

कार्यक्रममा इसानका केन्द्रीय अध्यक्ष प्रेमजन थापा श्रेष्ठले शिक्षा सुधारका लागि एकपक्षको मात्र नभई शिक्षासँग सम्बन्धित सबै पक्षको योगदान रहने उल्लेख गर्दै ती पक्षलाई उत्साहित गर्नका लागि सम्मान गरिएको बताए ।

वागमती प्रदेश सभा सदस्य तथा इसानका सल्लाहकार सरोजराज गोसाईंले शिक्षकलाई उत्साहित गर्नका लागि विभिन्न तालिम, गोष्ठीका साथ पुस्तक अध्ययन र अनुसन्धान अनिवार्य भएकोमा जोड दिए । इसानका केन्द्रीय उपाध्यक्ष उकेश कवांले शिक्षाको अवस्था डामाडोल हुनुमा शिक्षकको मात्र नभई शिक्षा मन्त्रालयको नीति गलत रहेको उल्लेख गरे । कार्यक्रममा इसान भक्तपुरका अध्यक्ष कृष्णराम त्वायनाबासुले कार्यक्रममा २२ विद्यार्थी, शिक्षक र कर्मचारी गरि कूल ५८ जनालाई सम्मान गरिएको जानकारी दिए ।

# भक्तपुरमा पनि देखियो हैजा संक्रमित

भक्तपुर । भक्तपुरमा पनि हैजाका संक्रमित भेटिएको छ । काठमाडौं उपत्यकाका दुई जिल्ला काठमाडौंको टोखाका १ जनामा र ललितपुर जिल्लाको गोदावारी, ग्वार्को, इमाडोल लगायत विभिन्न स्थानका १६ जनामा हैजा सङ्क्रमण देखिएको अवस्थामा भक्तपुरमा पनि एक जनामा हैजा संक्रमण देखिएको हो ।

प्राप्त जानकारी अनुसार भक्तपुरको चाँगुनारायण नगरपालिका वडा नं. ४ का एकजनामा हैजा संक्रमण देखिएको छ। सो संक्रमित व्यक्ति किष्ट हस्पिटलका कर्मचारी भएका कारण त्यसको विस्तृत विवरण स्वास्थ्य कार्यालय भक्तपुरले खुलाएको छैन। त्यसको तथ्यांक भक्तपुरले राखेको छैन । संक्रमित व्यक्ति किष्ट अस्पतालमै रहेको कारण स्वास्थ्य कार्यालयले त्यस घटनालाई लुकाएको छ। कार्यालयले त्यसलाई सार्वजनिक गरेको छैन ।

स्वास्थ्य तथा जनसङ्ख्या मन्त्रालयको इपिडिमियोलोजी तथा रोग नियन्त्रण महाशाखा (ईडीसीडी) का अनुसार २४ घण्टामा ललितपुरका दुई जनामा हैजा सङ्क्रमण पुष्टि भएको छ। यस्तै, कैलाली जिल्लाको धनगढी उपमहानगरपालिकाको ८ जनामा हैजा सङ्क्रमण पुष्टि भएको छ ।

स्वास्थ्य शाखा चाँगुनारायणले भने त्यस विषयमा स्वास्थ्य कार्यालयलाई जानकारी गराइ सकेको छ । साथै सो व्यक्तिको घर परिवारसँग सम्पर्क गरी हैजा संक्रमणको स्थितिबारे जानकारी लिएको स्वास्थ्य शाखाले जनाएको छ ।

# नौलो ज्योतीको विदाई तथा बधाई कार्यक्रम




भक्तपुर । मध्यपुर थिमिको पुरानो नीजि विद्यालयको रुपमा स्थापना भएको र नीजि स्कूलहरुमा न्युन शुल्क लिइ गुणस्तरीय शिक्षा पप्रदान गर्दै आइरहेको नौलो ज्योति ईङ्लिस स्कुल मध्यपुर थिमिले एसईई परिक्षामा उतिर्ण आफ्ना बिद्यार्थीहरूलाई बिदाई तथा बधाई सम्मान कार्यक्रमको आयोजना गरेको छ ।

कोभिडका कारण रोकिरहेको उक्त कार्यक्रममा २०७५ सालदेखि २०८० सालसम्मका ६ ब्याचका करिव २ सय ५० जना बिद्यार्थीहरूलाई बिदाई तथा बधाई सम्मान गरेको थियो ।

मध्यपुर थिमि नगरपालिकाका नगरप्रमुख सुरेन्द्र श्रेष्ठको प्रमुख आतिथ्यतामा सम्पन्न कार्यक्रममा बिद्यालय ब्यवस्थापन समितिका अध्यक्ष दुर्गामोहन श्रेष्ठ, बिद्यालयका प्रिन्सिपल शिवकृष्ण श्रेष्ठ, वडा नं. ४ का वडाध्यक्ष बालकृष्ण श्रेष्ठ, बिद्यालयका सेकेन्डरी तहका ईञ्चार्ज राजेन्द्र सिग्देल, बिद्यार्थी अनितमणि भण्डारीलगायतका ब्यक्तिहरूले शिक्षाको महत्वका बिषयमा चर्चा गरेको थियो । कार्यक्रममा बिद्यार्थीहरूले बीच बीचमा साँस्कृतिक तथा साँगितिक नाचगान समेत प्रस्तुत गरेको थियो ।

थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

– प्रेमचन्द

## सम्पादकीय

### बङ्गलादेशको वर्तमान राजनीतिबाट केही सिक्ने कि

गत सोमवार बङ्गलादेशकी प्रधानमन्त्री शेख हसिना वाजेद पद त्याग गर्दै देशै छाडेर भाग्न बाध्य भइन् । केही साता अघिबाट विद्यार्थीहरूले कोटा 'आरक्षण'का विरुद्ध आन्दोलन शुरु गरेका थिए । शेख हसिनाको सरकार भने विद्यार्थीसँग संवाद गर्नुको साटो आन्दोलन दवाउन लागि पऱ्यो जसको कारण प्रधानमन्त्रीले देशबाटै पलायन हुनु पऱ्यो ।

त्यहाँ नागरिक शासकलाई हटाएर विगतमा धेरैपटक सेनाले शासन हातमा लिएको थियो । यसपटक पनि सेना अगाडि सरिसकेको छ । पहिलेका सत्तापलट रक्तरञ्जित हुनेगरेका थिए । बंगबन्धु कहलिएका मुक्तिसंग्रामका नायक तथा प्रथम राष्ट्रपति शेख मुजिवका सपरिवार सन् १९७५ मा हत्या गरिएको थियो । बंगबन्धुकी छोरी हसिना र अनकी बहिनी भाग्यले बाँचेकी थिइन् ।

बङ्गलादेशले शेख हसिनाको उदय पछि दक्षिण एसियाका अरू मुलुकले भन्दा धेरै आर्थिक सामाजिक विकास गरेको छ । प्रतिव्यक्ति आयमात्र होइन नागरिकको क्रयशक्तिका साथै बङ्गलादेशको अन्तर्राष्ट्रिय प्रभाव पनि बढाएकी थिइन् । उनले एकछत्र राज गर्ने चाहना गर्दै लोकतन्त्रको आवरणमा एकदलीय अधिनायकवादी शासन चलाइन् । विपक्षविहीन निर्वाचनबाट पाएको बहुमतलाई निषेधको अस्त्र बनाइन् । सायद, यसैको परिणामस्वरूप उनले यसरी भाग्नु परेको हो ।

विद्यार्थी आन्दोलन आरक्षण खारेजीको मागबाट शुरु भएको थियो । साथै नयाँ पुस्ता सत्ता होइन भविष्यको खोजीमा थियो । तर, यसलाई पनि उनले विपक्षी राजनीतिक दलहरूले विगतमा गर्नेगरेका आन्दोलनकै रुपमा लिए । फलस्वरूप, बङ्गलादेश राजनीतिक सङ्कटमा फस्यो ।

बङ्गलादेशको यस प्रकारको राजनीतिक संकट दक्षिण एशियाली मुलुकहरुमा देखिदै गएको छ । केही समय अगाडि श्रीलंकामा समेत राजनीतिक र आर्थिक संकटका कारण सत्ता पलट भएको थियो । भारतमा पनि भाजपाको अतिवादी हिन्दुत्वका कारण अल्पसंख्यक अहिन्दु समुदायको लागि खतरा बढिरहेको छ । यही छिमेकी भारतकै अतिबादी हिन्दु सोचका कारा|ण अहिल बङ्गलादेशमा रहेका अल्पसंख्यक हिन्दुहरुको जीवन पनि खतरामा रहेको हालै सार्वजनिक भएको घटनाले देखाएको छ ।

नेपालको राजनीतिमा पनि लोकतन्त्र स्थापना पश्चातका दिनहरुमा राज्यसत्ताको बागडोर मुलधार मानिने नेपाली काग्रेस, नेकपा एमाले र नेकपा माओवादी केन्द्रकै सेरोफेरोमा घुमेको देखिन्छ । तर नेपालको अवस्थामा कुनै परिवर्तन आएको आमजनताले महशुस गर्न पाएका छैनन् । हो विकासका नाममा सडक, यातायात र संचारको क्षेत्रमा भने उल्लेखनीय प्रगति भएको छ । तर देशको अर्थ व्यवस्था रेमिट्यान्सको भरमा चलिरहेको छ । देशका युवाहरु रोजगारको खोजीमा विदेश पलायन हुने क्रम रोकिएको छैन ।

तर देशमा रहेका राजनीतिक दल कुनै बेला राजनीतिक सङ्घर्षमा सामेल भएबापत आजीवन राज्यबाट विशेष सुविधा लिने कार्यमा नै व्यस्त रहेका छन् । देशको प्रधानमन्त्री मन्त्रीलगायतमा पहिलो दोस्रो गर्दै कति पटक प्रधानमन्त्री, मन्त्री बन्न सफल भईयो त्यसकै लेखाजोखा हुने गरेको छ । यसरी आजीवन सुविधा खोज्ने र दिनेहरूले बङ्गलादेशको बर्तमान राजनीतिक उलटपलटबाट केही सिक्नु र आत्मालोचना गर्नु उचित हुनेछ । निर्वाचनबाट पाएको बहुमत वा कुनै कानुनले पनि नागरिकको प्राकृतिक अधिकार खोस्ने अनुमति दिँदैन भन्ने हेक्का रहोस् !

# उदाउँदो अवसरवाद, अस्ताउँदो समाजवाद

● संकेत कोइराला

दुई दाजुभाइ नदी किनारामा घुम्न गएछन् । घुम्दै जाँदा झुक्किएर भाइले दाइको खुट्टा कुल्चिएछ । दुखेर छटपटाएको दाइले भाइलाई एक झापू मारेछ । दाजुको मुक्काको कुनै प्रतिवाद नगरी भाइले बालुवामा लेख्यो- 'खुट्टामा कुल्चिएकाले मलाई दाइले आज एक थप्पड हिर्काउनु भयो ।'

भोलिपल्ट ती दाजुभाइ नदीमा नुहाउन गएछन् । नुहाउने क्रममा भाइलाई नदीको भेलले बगायो । त्यतिबेलै पानीमा हाम्फालेर दाइले भाइको उद्धार ग-यो । सामान्य अवस्थामा पुगेपछि भाइले नजिकैको ढुंगामा लेख्यो- 'नुहाउने क्रममा नदीले बगाउँदा दाइले मलाई बचाउनु भयो ।'

भाइको व्यवहारले चकित बनेको दाइले सोध्यो-' होइन, हिजो मैले थप्पड हान्दा तिमीले बालुवामा लेख्यौ । तर आज मैले बचाउँदा किन ढुंगामा लेखेको ?' दाजुको प्रश्नमा भाइको उत्तर थियो- 'आमाले सिकाउनु भएको थियो, जिन्दगीमा नराम्रा कुरा सधैं बालुवामा लेख्नु पर्छ, जसबाट ती कुरा छिटो मेटिएर जाओस् । अनि राम्रा कुरा ढुंगामा लिपिवद्ध गर्नुपर्छ ताकि ती कुरा सधैं अजर अमर रहिरहून ।' भाइको कुरा सुनेर दाजुले भाइलाई हेरिरह्यो । दाजुले मनमनै सोचिरहेको थियो- 'साँच्चै कति छिटो ठूलो भएछ मेरो फुच्चे भाइ ।'

केपी ओली, शेरबहादुर देउवा र पुष्पकमल दाहालले गल्ती सच्याउने यस्तै प्रयास गरेका भए यतिबेला समृद्धिको गाडी धेरै अघि बढिसक्थ्यो । देश उकालो लाग्न तथ्यांक, मिथ्यांक नभएर जनताको आत्मविश्वास पहिलो र अन्तिम सर्त हो । राष्ट्रियता जमिन, जंगल, जलमा नभएर मनमा फुल्छ । 'म' बाट 'हामी' भावको प्रवेश नै राष्ट्रियताको मूल बिन्दु हो । राष्ट्रपति, प्रधानमन्त्री, मन्त्रीका भाषण कागजी फूल हुन् । न त्यसमा कुनै पराग हुन्छ, न मौरीको आकर्षण नै । सरकार दुई तिहाईको त छ तर समृद्धिको उज्यालो प्रधानमन्त्री नामको रोबर्ट बाहेक कसैले त्यो रंग देख्दैन ।

'समृद्ध नेपाल, सुखी नेपाली' नामक जहाजका क्याप्टेन यति कमजोर छन् कि सामाजिक सञ्जालमा एउटा सानो प्रतिक्रियाको कुहिरो देख्ने बित्तिक्कै आत्तिएर जहाज मोडिहाल्छन् । नेपाली राजनीतिको समस्या यहीँ छ । अहिले गरिएको मौसमको प्रक्षेपण एकहप्ता पछि ठ्याक्कै मिल्छ । तर भोलिपल्ट ढल्न लागेको सरकारको छनक त्यो सरकारका हेडसरले २४ घण्टा अघिसम्म पाउँदैनन । ०८४ सालसम्म निष्कन्टक सरकार चलाउने गफ हानिरहेका प्रचण्ड कांग्रेस-एमालेको रातारातको गठजोडले ऐय्या पनि भन्न नपाई भुंग्रोमा परे। भक्कानिएको मन लिएर सराप्दै गद्दी छोड्ने पूर्वप्रधानमन्त्रीको परम्परालाई उनले निरन्तरता दिए । स्याण्डवीच बनेको पत्तो पाउँदा अर्काले दौरा सुरुवाल लगाइसकेको थियो ।

हाम्रो राजनीतिक सामाजिक अध्ययन र प्राज्ञिक धरातलबाट निर्देशित छैन । बरु राणाले घोडा चढ्न नदिएको आक्रोशमा काँग्रेस बनेकाहरु क्रान्तिका भीष्म पितामह बनेका छन् । पढाईमा भुस भएकाहरु बुर्जुवा शिक्षाको विरोध गर्दै राजनीतिमा होमिएका कथित क्रान्तिकारी कम्युनिष्ट बनेका छन् ।

काम गरेर खान जाँगर नलागेपछि बन्दुक देखाएर सित्तैमा खान पल्केकाहरु रातारात गणतन्त्रका अभियन्ता दरिए । देश केक बनाउन पाए 'छोटे महाराज'को सपना देख्नेहरु मधेशवादी, जातिवादी र धर्मभीरु बनेर देखा परेका छन् । राजनीतिको यही विरुप बाछिटाका कारण गरी खाने मानिसका लागि यो देश सिउँडी बन्दै गएको छ ।

सरकारले गरेको निर्णय दलालले एक सेकेण्डमा एक सय असी डिग्री परिवर्तन गरिदिन्छन् । किनेकोका अगाडि चिनेको धर्मराउँदै गएको छ । कांग्रेस, एमाले, माओवादी जमिनबाट माथि उठेका नेताहरुका लागि कार्यकर्ता बिझाउन थालेका छन् । बहुदल आएपछि तीन दशकयता एउटै पात्र र प्रवृत्तिले क्रान्तिकारीका धार भुत्ते बनाइदिएका छन् ।

पहिला पहिला कांग्रेस कांग्रेससँग अनुगृहित भएर काम गरिदिन्थ्यो । एमाले, माओवादीमा यही सिद्धान्त लागू हुन्थ्यो । अहिले त अहँ त्यस्तो छैन । हरेक पार्टीका मान्छेले दलालमार्फत आफ्नै गोत्रीयलाई शुभलाभ दस्तुर असुल्नु पर्छ ।

एउटै खेतालोले बालकोट, भैंसेपाटी र बुढानिलकण्ठको सबै आवश्यकता पूरा गरिदिन्छ । चाकरी र ढोगभेटसँगको सगुन पार्टीको सिद्धान्त र कार्यकर्ताभन्दा माथि हुन्छ । जनता, पार्टीको घोषणापत्र, विधि विधान त काम नगर्नका लागि बाहना बनाउने माध्यम मात्र हुन् । पञ्चायतको मूल हाँगोमै समृद्धिको इन्द्रेणी फले फुलेको छ । गणतन्त्र त झन् पञ्चायतको कलमी विरुवाबाट उत्पादित बालीजस्तै भएको छ । नेपालमा देखिएका बहुरुपी चरित्र र अराजनीतिक परिवर्तन हिन्दी फिल्मीको तीन घण्टे दृश्यभन्दा अविश्वसनीय लाग्छ ।

सरकारका नयाँनयाँ मन्त्रीलाई लाग्छ- सृष्टिको शुरुवात उनीहरुले शपथ लिएपछि बल्ल शुरु भएको हो । भात खाँदै यो सिंढीमा उक्लिएकाहरु 'भूजा ज्यूनार'को यात्रामा लाग्छन् । सेना, पुलिसको बनावटी रजगजमा रमाउन पुग्छन् । सोचे जति र खोजे जति सेवा हाजिर हुन्छ । फूलमाला र खादासँग अहोरात्र भेट भइरहन्छ । यसो भएपछि त आफ्नो भाषण उद्गारमा परिणत भएको भ्रम उत्पन्न हुन थाल्छ । शब्द ब्रह्म वाक्य रहेको भान पर्न थाल्छ । कुर्सीले कालिदासलाई रातारात चाणक्य बनाउँछ । साइलकहरु सरस्वतीका वरद् पुत्र ठहरिन्छन् ।

पानीमरुवाहरु वीर हनुमान कहलाइन्छन् । गाउँका कुखुरा चोरहरु मन्त्री हुनासाथ विदुर नीतिका व्याख्याता हुन पुग्छन् । अनि तीन करोड जनतालाई उल्लू बनाइन्छ- यही हो प्रजातन्त्रको सुन्दर अभ्यास भनेर ।

अहिले त झन् अराजकतालाई संघीय र समावेशी गणतन्त्रको पदवी भिराइने अभ्यास तीव्र गतिमा भएका छन् । प्रधानमन्त्री ओलीको बारम्बार दलील हुने गर्छ- राजनीतिक पात्र र प्रवृत्तिको विरोध गर्नु संघीय गणतन्त्रको खिलाफमा उत्रनु हो । जनताको सरकार कस्तो हुनुपर्छ ? रामायणमा एउटा धोवीले शंका गर्दा अयोध्याका राजा रामले आफ्नी पत्नीलाई अग्निपरीक्षामा होमेका थिए ।

आफ्नै देशको एक चौथाइ भागमा नाम नसुनिएका मन्त्रीहरुको अर्ती, मुलुकको आर्थिक विकासमा २.६ प्रतिशत योगदानमा सीमित निजीक्षेत्रको फूर्ति कसैलाई पचेको छैन् । जब एक व्यक्ति भ्रमले ग्रस्त हुन्छ, उसलाई पागल भनिन्छ । जब धेरै मानिस भ्रमले ग्रस्त हुन्छन, त्यसलाई धर्म भनिन्छ । अहिले जतातते झूटलाई धर्म मान्ने संस्कृति हावी भएको छ । निसन्देह राजनीतिक स्वतन्त्रताले संसारमा भोकाहरुको पेट भरिएको उदाहरण छैन ।

२०१५ सालमा प्रधानमन्त्री हुँदा बीपी कोइरालाले मन्त्रिपरिषद् पहिलो बैठकमा प्रधानमन्त्रीले पाउने तलब सुविधाबाट एक हजार कट्टी गरेर जनताप्रति ममता देखाएका थिए । पृथ्वीनारायण शाहले बिसे नगर्चीबाट एक रुपियाँ चन्दा लिएर एकीकरणको महाभियान सुरु गरेका थिए । भला यसले देश विकास त नहोला रे तर नेतालाई राजनेता बनाउने भनेकै यस्तै क्रियाकलापले हो । ठूलो भएर के गर्नु कैंचीले छुट्याउने काम गर्छ तर हेपिएको त्यही सानो सियोले हरदम जोड्छ । त्यसैले मानिसले जोडिने कर्म गर्नुपर्छ । फाटेको त बादल मात्र राम्रो हो नि ।

सिक्न टाढा जानै पर्दैन । मानिसले किन दुःख पाउँदो रहेछ भन्ने उत्तर खोज्न निस्कँदा सिद्धार्थ राजकुमार भगवान गौतम बुद्ध भएर प्रकट भए । कार्पेन्टरको छोरो यशुक्रिष्ट भएर उदाउलान भनेर कसले विश्वास गरेको थियो ? हामीले प्रजातन्त्रको जननी बेलायतलाई मान्यौं तर हामी त्यस्तो पावन भूमिका नागरिक हौं, जनकपुरका राजा जनकले आफ्नी छोरी सीताको विवाह गर्दा समेत प्रजातान्त्रिक प्रक्रिया अपनाएर बरको छनौट गरे । धनु उठाउने प्रतिस्पर्धामा अब्बल ठहरिएपछि अयोध्याका राजकुमार रामले सीताको हात थाम्ने अवसर पाए । धार्मिक ग्रन्थबाट नै लोकअभ्यास गरिएको त्यो भूमि अहिले एकादेशको सन्नाटा जीवन बाँचिरहेको छ । सबैको अस्तित्व देखिने सलादजस्तो लोकतन्त्र छोडेर हामी जसको लाठी, उसको भैंसीतर्फ उन्मुख छौं ।

श्रीलंकाबाट प्रेरित लिक्वानले सिंगापुरे जनतालाई यस्तो हिरा बनाइदिए जुन देशका नागरिकले विश्वका कुनै मुलुक टेक्दा पनि कुनै तगारो लाग्दैन् । उनले विदेशीको रेडिमेड माछा कहिल्यै स्वीकारेनन् । बरु बल्छी मागेर जनतालाई माछा मार्न सिकाए । पाउरोटीको साटो पाउरोटी बनाउने सीपको अभियान छेडे । हाम्रा नेताहरु भने आफ्ना युवालाई खाडी पठाउन हौसिए । तर त्यहाँका मोहम्मद महाथिरले देश बनाउन गरेको योगदान चटक्कै बिर्सिए ।

केही वर्षअघि भेनेजुयलाका राष्ट्रपति ह्युगो चाभेज मर्दा ते-हदिने दाजुभाइ बिते जसरी अनुहार बिगार्ने नेताहरु चाभेजले जस्तो जनतालाई समृद्ध बनाउने काममा नौ नारी गलाएर बसे । आफ्ना जनतालाई ५० पैसा लिटर तेल उपलब्ध गराउने चाभेजको लोकप्रियता कति होला ? अनुमान मात्र गर्न सकिन्छ । जो मानिस एक्लो उभिन्छ, उही महान हो । चाभेजले बाचुन्जेल अमेरिकाजस्तो देशलाई च्यालेन्ज गरिरहे । अन्तिम अवस्थामा पनि छिमेकी देश ब्राजिलमा उपचार गरे तर युरोप, अमेरिका टेकेनन् ।

लाटो छोराले बाउ घुर्क्याएजस्तो छिमेकीलाई मनपरी भन्ने अनि आङ्मा सुके लुतो निस्कियो भने उसैले पठाइदिएको एयर एम्बुलेन्स चढेर राष्ट्रियताको पाखण्डी गीतामा शायदै अरु देशका नेता रमाउँछन् । गुलियो बचन बोल्ने त बोल्ने भइगो, कलबिख तीतो बोल्ने पनि अन्ततः प्रायोजित विज्ञापनको कलाकार रहेको भेद खुल्ने गरेको छ । मान्छे हैन, रोबर्ट मान्छे बोल्ने गरेको छ । गाई विभिन्न रंगका भएपनि दूध सेतै हुन्छ । अलग अलग धर्मको शैली अलग भएपनि आखिर त्यसको निष्कर्ष एउटै हुन्छ- मानिसले शुभ कर्म गर्नुपर्छ ।

नीति भन्छ- अन्यायपूर्वक आर्जन गरेको धनबाट महान फल दिने ठूला ठूला यज्ञ गर्नाले त्यति धर्म हुँदैन जति न्यायोपार्जित थोरै भए पनि श्रद्धापूर्वक दान दिनाले हुन्छ। न्यायपूर्वक उपार्जन गरेको धनबाट जीवन निर्वाह गर्ने तथा दानको महत्त्व थाहा पाउने व्यक्तिले दान र तपस्याबाट स्वर्गलोक प्राप्त गर्दछ। शिक्षाको सुरुवात किताबबाट होइन, कोक्रोबाट हुनुपर्छ। ज्ञानका हकदार शिक्षक नभएर गुरु हुन्।

शिक्षकले सूचना दिन्छन् भने गुरुले ज्ञान। ज्ञानले बाँच्ने कला सिकाउँछ। तर सूचनाले फन्टुस गफ गर्न। यसैको परिणाम पपकर्न भनेपछि मरिहत्ते गर्ने तर हाँडीमा भुटेको मकैलाई घृणा गर्ने पुस्ता हावी बन्दै गइरहेको छ। कानमा लगाइएको सुनले आफ्नो विज्ञापन गर्दैन। त्यसको सौन्दर्य मानिसले बाहिरबाटै हेरेर गर्न सक्छ। जीवन असन्तोष हो, जो संग जे छ त्यसले हुँदैन पुग्दैन, जे हुँदैन त्यो चाहिन्छ। नभई हुँदैन। जे छ, जे छैन त्यसैको सन्तुलन मिलाउनु र रमाउनु सुख हो। सन्तोष पनि त्यही हो। मलाई कसैले माया गर्छ भन्ने विश्वास नै त सुख हो नि।

माओत्सेतुङले भनेका थिए- 'जो देश र जनताका लागि मर्छ, उसको मृत्यु पहाडजस्तै ग-हौ हुन्छ। आफ्नो निम्ति मात्र मर्नेको मृत्यु प्वाँख जत्तिक्कै हलुका हुन्छ।' रोटीमा जनताको पहुँच नभएसम्म केक काट्ने कामलाई पुरै बर्जित गरे। उनैका चेलाहरुलाई एउटा प्रश्न- 'कस्तो मृत्यु रोज्ने कमरेडहरु ?' -खबरहबबाट

त्रिम TIMES

वर्ष १८ अङ्क ०४ २०८१ साउन २३ गते बुधबार
07 Aug. 2024 Wednesday



# शेख हसिनाको भवितव्य : संकटमा "एसियन टाइगर"

काठमाडौं- टेक्सटाइल उद्योग, आइटी र औषधि उत्पादनमार्फत समृद्धितर्फ अघि बढिरहेको दक्षिण एशियाको उदीयमान अर्थतन्त्र भएको देश बंगलादेश विद्यार्थी आरक्षणको सामान्य विषयलाई समयमै सम्बोधन गर्न नसक्दा गम्भीर राजनीतिक संकटमा फसेको छ।

देशका शक्तिशाली प्रधानमन्त्री शेख हसिना पदबाट राजीनामा दिएर आइतबार नै भारततिर पलायन भएकी छिन्। ढाकास्थित प्रधानमन्त्री निवास र संसद भवनसमेत आन्दोलनकारीले कब्जामा लिएका छन्।





हसिनाका पिता एवम् बंगलादेशका संस्थापक नेता मुजिबुर रहमानको मूर्ति तोडिएको छ। संसदमा दुई तिहाई बहुमतसहितको जननिर्वाचित प्रधानमन्त्रीले देश छाडेपछि सेनाले अन्तरिम सरकार बनाउने घोषणा गरेको छ।

आइतबारको सनसनीपूर्ण घटनाक्रमसँगै बंगलादेशमा १५ वर्षदेखि शासन गरिरहेको शेख हसिनाको शासनसत्ता ढलेको छ। अर्थात्, दक्षिण एशियाको 'एशियन टाइगर'को रुपमा चिनिने देशमा चरम राजनीतिक संकट देखिएको छ। गत जुलाईदेखि चर्केको विद्यार्थी आन्दोलनका क्रममा सयौं नागरिकले ज्यान गुमाएका छन् भने अर्बौं बराबरको जनधनको क्षति भएको छ।

विगत १५ वर्षदेखि लगातार सत्तामा रहँदै आएकी हसिनामाथि निरंकुश बनेको आरोप विपक्षीहरुले लगाउने गरेका थिए। विपक्षीमाथि दमन गरेको, चुनावमा धाँधली गरेको, अभिव्यक्तिको स्वातन्त्रता संकुचित गरेको र आफ्नो माग लिएर आवाज उठाउने जनतामाथि बल प्रयोग गरेर राज्य आतंक मच्चाएको आरोप उनीमाथि विपक्षीहरुले लगाउँदै आएका थिए।

अन्ततः जनतामा असन्तोष र विद्रोह जागेपछि जस्तोसुकै शक्तिशाली सरकार पनि सडक आन्दोलनकै बलमा ढल्दो रहेछ भन्ने सन्देश दिएको छ। बंगलादेशमा सडकबाटै दुईतिहाइ बहुमतको सरकार ढलेपछि नेपालीहरूमा पनि त्यसले सामाजिक सञ्जालमा व्यापक चर्चा पाइरहेको छ।

अन्ततः सन् १९७५ मा परिवारका सबै सदस्य मारिएपछि राजनीतिमा होमिएकी एक शक्तिशाली शासकको राजनीतिक अवसान हुन पुगेको छ। सरकार ढल्ने कारण अरु केही नभएर आरक्षणको मुद्दा थियो। बंगलादेशमा स्वतन्त्रता संग्राममा सहभागी भएकाहरूका परिवारलाई मेडिकल शिक्षालगायतमा सरकारी सुविधामा आरक्षणको व्यवस्था गरिएको थियो।

स्वतन्त्रता सेनानीको परिवारका लागि ३० प्रतिशत आरक्षणको व्यवस्थाले आम नागरिकमा चरम असन्तुष्टि व्याप्त थियो। सुप्रिम कोर्टले आरक्षणलाई ५ प्रतिशतमा झार्ने आदेश दिए पनि कोटा व्यवस्था अहटाएको भन्दै आन्दोलनले निरन्तरता पाइरह्यो।

स्वतन्त्रता सेनानीका परिवारलाई ३० प्रतिशत आरक्षणको प्रावधानले अवामी लिग पार्टीका कार्यकर्तालाई मात्रै फाइदा पुगेको विपक्षीको गुनासो थियो। किनभने, अवामी लिग नै त्यस्तो पुरानो पार्टी हो, जसका कार्यकर्तांले १९७० ताका पकिस्तानसँग संघर्ष गरेका थिए। र, अहिले तिनैका सन्तानले आरक्षणको सुविधा पाउँदै आएका थिए।

आन्दोलनको बहाना आरक्षणको विरोध र विद्यार्थी आन्दोलन भएता पनि हसिना सरकारले लिँदै आएको विपक्षीलाई दमन गर्ने नीतिका कारण सरकारविरुद्ध प्रदर्शन बलियो हुँदै गयो र यो आन्दोलनमा विपक्षी पार्टीहरुको समर्थनपछि झन् चर्किँदै गयो। गत जुलाईदेखि चर्केको विद्यार्थी आन्दोलनमा करिब सय जनाको ज्यान जाने गरी अन्धाधुन्ध गोली प्रहार गर्ने हसिनाको दमनकारी नीतिका कारण आन्दोलनको ज्वाला यसरी दन्कियो कि अन्तिम घडीमा आउँदा त्यहाँको राष्ट्रिय सेनाले आन्दोलनकारीलाई दबाउन चाहेन र प्रधानमन्त्री हसिनालाई असहयोग गर्‍यो। त्यसलगत्तै उनी सेनाकै हेलिकोप्टरमा छिमेकी देश भारततिर पलायन भईन्। उनी अहिले भारतको उत्तरप्रदेशस्थित गाजियाबादमा छिन्। त्यहाँबाट उनी बेलायतको लण्डन जाने वा युरोपकै फिनल्याण्ड वा स्वीजरल्याण्डमा राजनीतिक शरणको लागि जानको लागि पहल भइरहेको चर्चा छ।

आखिर संस्था जतिसुकै बलियो भए पनि जनताको हितमा काम नहुँदा सडकबाटै दुईतिहाइवाला सरकार ढल्दो रहेछ भन्ने बंगलादेशको घटनाले स्पष्ट पारेको छ। बंगलादेशको ३५० सदस्यीय संसदमा हसिना सभापति रहेको अवामी लिगको एक्लै २७१ सिट छ। यो भनेको दुईतिहाइभन्दा झण्डै २७ सिट बढी हो। जबकि विपक्षीसँग ७९ सिटमात्रै छ। बंगलादेशमा ३५० सदस्यीय संसदमा ३०० सिटमा प्रत्यक्ष निर्वाचित हुन्छन् भने ५० सिटमा समानुपातिक एवम् आरक्षणबाट चुनिने संवैधानिक व्यवस्था छ।

दुईवटा चुनावमा धाँधली भएको आरोप लगाउँदै विपक्षी पार्टीहरूले बहिस्कार गरेका कारण हसिनाको दल अवामी लिगसँग एक्लै २७१ सिट छ भने विपक्षीसँग स्वतन्त्र ६२ जनासहित ७९ सिट मात्रै छ। २१ सिटमा साना दलको प्रतिनिधित्व छ। एक सिट रिक्त छ।

सडकबाटै हसिना सत्ताच्युत भएका कारण अब उनको दलसँग रहेको दुईतिहाइको कुनै हिसाब-किताब छैन। किनभने, अब बंगलादेशको सत्ता त्यहाँको सेनाले लिइसकेको छ। सेनापतिले अन्तरिम सरकार बनाउने घोषणा गरेका छन्। त्यसका लागि दलहरूसँग सेनाले छलफल थालेको जनाएको छ।

हसिना सरकार ढलेपछि अब एशियाको टाइगर मानिँदै आएको बंगलादेशको आर्थिक समृद्धि र शान्तिको यात्रामा प्रश्नचिन्ह लागेको छ। लोकतन्त्रमाथि सैन्यकरण र धार्मिक एवम् जातीय अतिवादी खतरा अरु बढ्ने चिन्ता देखिएको छ। किनभने, जननिर्वाचित सरकार ढलेपछि विपक्षी दलहरूले सरकारको नेतृत्व सम्हाल्न नसकेर सेना हाबी भएको छ। यसले त्यहाँको लोकतन्त्रलाई थप खतरामा पार्ने विश्लेषण हुन थालेको छ।

हसिनाको अवामी लिग पार्टीलाई धर्मनिरपेक्षतावादी, मध्यमार्गी दलका रुपमा लिइन्छ। अब हसिनाको बहिर्गमनसँगै बंगलादेशमा धार्मिक अतिवाद र थप दक्षिणपन्थी शक्ति सतहमा आउन चिन्ता पनि प्रकट हुन थालेको छ। यसकै फलस्वरुप केही अल्पसंख्यक हिन्दुहरुको घरमा आगजनी भएको खबर प्राप्त भएको छ।

शेख हसिनाका पिता शेख मुजिबर रहमान (शेख मुजिब) ले सन् १९७० मा पाकिस्तानबाट बंगलादेशलाई अलग गर्ने संघर्षमा भूमिका खेलेका थिए। मुजिब दक्षिण एशियाकै शक्तिशाली नेता मानिन्थे। अवामी लिग पार्टीका सभापति एवम् प्रथम राष्ट्रपति (सन् १९७१-१९७२) बनेका मुजिबर बंगलादेशमा संसदीय प्रणाली लागू भएपछि प्रधानमन्त्रीसमेत बने। बंगलादेशमा सन् १९७२ देखि संसदीय शासन प्रणाली लागू भएको हो।

पाकिस्तानबाट छुटेपछि केही समय पूर्वी पाकिस्तान विधानसभामा निर्वाचित जनप्रतिनिधिमार्फत शासन चल्यो भने मुजिब अन्तरिम राष्ट्रपति बने। उनकै अनुरोधमा १९७२ मार्च १७ मा भारतीय सेनाले बंगलादेश छाड्यो।

त्यही साल डिसेम्बर १६ मा नयाँ संविधान जारी भयो र पहिलो संसदीय चुनाव १९७३ मा सम्पन्न भयो। मुजिबको पार्टीले बहुमत पाएर पहिलो जननिर्वाचित सरकार बनायो। धर्मनिरपेक्षताको प्रतिबद्धताविपरीत प्रतिबन्धित इस्लामिक एकेडेमी ब्युँताएको जस्ता आरोपहरू उनीमाथि लाग्न थाल्यो।

पाकिस्तानी सेनाले स्वतन्त्रता संग्रामलाई दबाउन ढाकामा सन् १९७१ मार्च २५ को मध्यरातमा नरसंहार गर्‍यो। मुजिबुरलाई पक्राउ गरी पश्चिम पाकिस्तान लगियो, जहाँ उनलाई सैन्य अदालतबाट मृत्युदण्डको सजायँ सुनाइयो, जुन कार्यान्वयन हुन सकेन।

त्यसबेला भारतले बंगलादेशको पृथकतावादी आन्दोलनलाई साथ दियो। अन्ततः पाकिस्तानले आत्मसमर्पण गर्‍यो। १९७२ जनवरीमा शेख मुजिब कारागार मुक्त भई घर फर्किए र बङ्गलादेशको प्रथम राष्ट्रपति बन्न सफल भए।

हसिनाका पिता रहमानले सन् १९७२ देखि बंगलादेशमा शासकीय प्रणाली परिवर्तन गर्दै राष्ट्रपतीय प्रणालीको साटो संसदीय प्रणालीमा जाने संवैधानिक प्रबन्ध गरे। नयाँ व्यवस्थापछि उनी राष्ट्रपतिको साटो प्रधानमन्त्री बने।

रहमान बंगाली राष्ट्रवाद, प्रजातन्त्र, समाजवाद र धर्मनिरपेक्षताको पक्षधर थिए। उनको यो विचारलाई बंगलादेशमा कतिपयले 'मुजिबवाद' समेत भन्ने गरेका थिए।

आफ्नो राजनीतिक लाइन अनुसार मुजिबले धर्मनिरपेक्षतासहितको संविधान निर्माणको तयारी गरे। तर, उनी चरम गरिबी र भ्रष्टाचारको चपेटामा परे। यसबाट उम्कन उनले एकदलीय राजनीतिको घोषणा गरे। त्यस्तो घोषणाको ७ महिना पनि नबित्दै सन् १९७५ अगष्ट १५ का दिन सेनाको एक समूहले प्रधानमन्त्री रहमानसहित उनको बंश विनास गरिदियो, विदेशमा रहेकाले शेख हसिना र उनकी बहिनी भने बच्न सफल भइन्।

पिताको हत्यापछि हसिनालाई स्वदेश फर्कन प्रतिबन्ध लागेको थियो। मुजिबको हत्यापछि बंगलादेश केही वर्षसम्म अस्थिरता, द्वन्द्व र सैन्य हस्तक्षेपको चपेटामा फसिरह्यो। सन् १९९६ मा एकपटक चुनाव जितेर प्रधानमन्त्री बनेकी हसिना बीचबीचमा विवादमा परिन्। भ्रष्टाचार मुद्दामा जेलसमेत

बाँकी पेज ६ मा

# फ्रिजमा राखेको खानेकुरा कति दिनसम्म खान मिल्छ ?

काठमाडौं - प्रविधिको विकासले हाम्रो दैनिक जीवनयापन निकै सहज बनाइदिएको छ। घरमा स-सानादेखि ठूला कामका लागि विद्युतीय उपकरणको प्रयोग बढ्न थालेको छ। त्यसमध्ये फ्रिज पनि एउटा हो। पहिला होटल तथा धनाढ्य परिवारमा सीमित रहेको फ्रिजको प्रयोग अहिले हरेकको भान्सामा पुगेको छ।

जसले गर्दा हाम्रो खानपानको शैली बदलिँदै गएको छ। व्यस्त जीवनशैलीका कारण फास्टफुडको प्रचलन बढेको छ। खानेकुरा एकैपटक पकाउने र फ्रिजमा राखेर खानेको संख्या बढ्दो छ। यसले समयको बचत गराउँछ र सरसफाइमा पनि धेरै समय दिनु पर्दैन भन्ने सोचाइ धेरैको छ। तर यसको प्रयोगले सहजतासँगै स्वास्थ्यमा चुनौती पनि थपिएको छ।

फ्रिजमा खानेकुरा भण्डारण गर्ने बारेमा राम्ररी ज्ञान नहुने कारणले खानेकुरा दूषित हुनपुग्छ। त्यस्तो खानेकुराले तपाईंको स्वास्थ्यमा गम्भीर संकट निम्तिनसक्छ। त्यसैले खानेकुरा भण्डारणमा विशेष चनाखो बन्नुपर्ने र सतर्कता अपनाउनुपर्ने चिकित्सक बताउँछन्।

पोषणविद् डा. भुपाल बानियाँका अनुसार डि फ्रिजमा माइनस १८ डिग्रीमा खानेकुरा राख्दा ब्याक्टेरियल प्रदूषण हुनबाट बचाउँछ। ब्याक्टेरिया चिसोका कारण विकास हुन नपाउँदै मर्छ भन्ने आम बुझाइ हुन्छ। तर हरेक खानेकुराको आफ्नै केमिकल र विशेषता हुन्छन्। कुन खाना कति दिनसम्म भण्डारण गरेर राख्ने ? कसरी राख्ने ? भन्ने कुरा बुझ्नु जरुरी हुने उनको भनाइ छ।

फ्रिजको प्रयोग र महत्व

डिफ्रिजमा खानेकुरा राख्ने कुरा मान्छेले लामो समयदेखि सिक्दै आएका हुन्। बिग्रिने सामान बरफमा प्याक गरेर राख्ने, खानेकुरा कहिल्यै अच्येरो पर्दा चाहिन्छ भनेर राख्ने चलन परापूर्वकालदेखि नै चलेको हो। अहिले प्रविधिले हाम्रो दैनिक जीवन सहज बनाइदिएपछि कार्यव्यस्तताले नभ्याउने अवस्था छ। त्यस्तै सजिलोको लागि भनेर हरेकको घरघरमा यो सुविधा पुगेको छ। प्राय सबैले सजिलो असजिलो दुवै अवस्थामा फ्रिजको प्रयोग गर्न थालेको पोषणविद् बानियाँ बताउँछन्।

रेफ्रिजेटर शून्यदेखि ५ डिग्री तापक्रममा खानेकुरा राख्ने हो। यसमा राखेको खानेकुराहरु लामो समयसम्म खान मिल्ने हुँदैन। खाना ताजा र राम्रो देखियोस भन्नका लागि मात्रै यसरी राख्ने हो। त्यसमा राखेको खाना केही समयको लागि मात्रै खान मिल्ने हुन्छ। त्यसैले फ्रिजमा खाना राख्नु नराम्रो होइन तर तापक्रम मिलाएर राख्न जान्नुपर्ने हुन्छ।

दाल भात कति दिनसम्म राखेर खान सकिन्छ ?

पाकेको खाना सामान्यतया एक दुई दिनसम्म खान मिल्ने अवस्था हुन्छ। तर बुझ्नुपर्ने के हुन्छ भने पाकेको र नपाकेको अर्थात् काँचो खानेकुराहरुसँगै राख्दा छिटो बिग्रिने सम्भावना हुन्छ। डब्लुएचओको सिद्धान्त अनुसार पाकेको खानेकुरा छुट्टै, काँचो खानेकुरा, फलफूल र तरकारी छुट्टै राखिएको छ भने दुई दिनसम्म खान मिल्छ।

फ्रिजमा खाना राख्ने तरिका

पकाउने बित्तिकै तातो खाना फ्रिजमा राख्नु हुँदैन। पकाएको आधा वा एक घण्टामा सेलाइसकेपछि फ्रिजमा राख्नु राम्रो हुन्छ। आफूले भण्डारण गरेको खाना शून्य दशमलव ५ डिग्रीमा छ कि छैन भनेर सचेत बन्नुपर्ने हुन्छ। फ्रिजमा राखेको कुरा ताजा बन्नका लागि २४ घण्टा कुनै पनि समय फ्रिज बन्द हुनु हुँदैन अर्थात् करेन्ट लगातार सप्लाइ भएको हुनुपर्छ। समयसमयमा बत्ती गएमा पनि फ्रिजमा राखेको खानेकुरा बिग्रने जोखिम हुन्छ।

फ्रिजमा राख्दा खानेकुराको वर्गीकरण गर्नुपर्छ। जस्तै तरकारी र फलफूलहरु, पकाएको खाना, मासु, दुधजन्य परिकार एकैठाउँमा नराखेर छुट्टाछुट्टै राख्नुपर्छ। यसरी खाना राख्दा एउटा खानाको ब्याक्टेरिया अर्को खानामा जान पाउँदैन। जसले गर्दा भण्डारण गरिएका सबै खानेकुरा स्वस्थकर हुन्छन्।

आफूले राखेको खाना कति दिनसम्म खान मिल्ने हो त्यो बुझ्नुपर्यो। जस्तै मासु राखेको छ भने दुईदेखि तीन दिनसम्म खान सकिन्छ। अण्डालाई पाँच सातासम्म प्रयोग गर्न सकिन्छ। त्यो भन्दा धेरै समय राखेर खाँदा स्वास्थ्यमा विभिन्न समस्या देखिनसक्छन्।

कस्तो खाना फ्रिजमा राख्न मिल्दैन ?

केरा- केरालाई फ्रिजमा राख्नु हुँदैन। फ्रिजमा राख्दा यसको बोक्रा कालो भएर स्वादमा परिवर्तन आउन थाल्छ। केरा तातो हावापानीमा फल्छ। केरालाई चिसो तापक्रममा राखियो भने पाक्न मद्दत गर्ने इन्जाइमले काम गर्न छोड्छ। चिसोले केराका कोशिकालाई क्षति पुर्‍याउँछ। त्यो स्वास्थ्यका लागि हानिकारक हुन्छ।

खरबुजा- खरबुजामा पर्याप्त मात्रामा पानी पाइन्छ। गर्मीको बेलामा यसलाई चिसो बनाउन भनेर फ्रिजमा राख्छौं। तर, खरबुजालाई पनि फ्रिजमा राख्नु हुँदैन। यसो गर्नाले यसमा पाइने एन्टी अक्सिडेन्ट कम हुने र यसको पौष्टिकता कम हुन्छ। त्यसैले विज्ञले खरबुजालाई फ्रिजमा नराख्न सल्लाह दिने गर्दछन्।

मेवा- गर्मीमा मेवाको खपत पनि निकै धेरै हुन्छ। धेरैले मेवा छिट्टै नबिग्रियोस् भनेर फ्रिजमा राख्छन्। तर, मेवालाई फ्रिजमा राख्दा यसको स्वाद र बनावटमा परिवर्तन आउन सक्छ। त्यसैले यी चिज फ्रिजमा नराखेकै राम्रो मानिन्छ।

डि फ्रिजमा राखेको मासु कति स्वस्थकर ?

मासु एकदमै छिटो बिग्रिने खानेकुरा हो। त्यसमा ब्याक्टेरिया छिटो फैलिने सम्भावना रहन्छ। त्यस्ता ब्याक्टेरियाबाट बचाउनका लागि मासु डि फ्रिजमा राख्नुपर्छ भन्ने वैज्ञानिक तथ्य छ। त्यसैले कुखुराको मासु छ भने छोटो समय, माछा र रातो मासु छ भने अलि लामो समय फ्रिजको प्रयोग गर्न सकिन्छ।

फ्रिजमा राखेको खाना खाँदा के कस्ता कुरामा ध्यान दिने ?

होटेल रेष्टुरेण्ट व्यवसायीले कुन सामान कहिले बनेको हो कति समयसम्म खान मिल्ने हो भन्ने कुराहरु उल्लेख गरेर राख्नुपर्छ। घरमा पनि खानेकुरा राख्दा किनेर ल्याएको सामानहरु मिति नाघेको भए नखाने र आफै घरमा बनाएको खानेकुरा हो भने पनि कहिले बनाएको हो कहिलेसम्म खान मिल्ने हो भन्ने कुरा थाहा पाउन् जरुरी हुन्छ।

# चीनले सार्वजनिक गऱ्यो आफ्नै स्याटलाइट इन्टरनेट

काठमाडौं । चीनले स्पेस एक्सको स्टारलिंकलाई टक्कर दिन मङ्गलबार आफ्नो स्याटलाइट नेटवर्कको पहिलो ब्याच सार्वजनिक गरेको छ । 'थाउजेन्ड सेल्ज' नाम दिइएको स्याटलाइटहरूको पुञ्ज अन्तर्गत लो-अर्थ अर्बिट (पृथ्वीको तल्लो कक्ष) का लागि १५ हजार भन्दा बढी स्याटलाइट रहने चीनले बताएको छ ।

जसले विश्वव्यापी इन्टरनेट पहुँच स्थापित गर्नेछन् । चाइनिज एकेडेमी अफ साइन्सका अनुसार लङ मार्च सिक्स ए क्यारियर रकेटले चीनको शाङ्सी प्रान्तको उत्तरमा रहेको ताइयुयान प्रक्षेपण केन्द्रबाट पहिलो चरणमा १८ ओटा स्याटलाइट लिएर अन्तरिक्षका लागि उडेको छ, जुन मिसन पूर्ण रूपमा सफल भएको बताइएको छ ।

चीनको सरकारी सञ्चार संस्था सीसीटीभीका अनुसार विश्वव्यापी इन्टरनेट नेटवर्क कभरेजको उद्देश्य अनुरूप सन् २०२५ सम्म पुञ्जको पहिलो चरणको काम सम्पन्न गर्न ६४८ स्याटलाइट अन्तरिक्षमा प्रक्षेपण गर्ने चीनको लक्ष्य छ । चीनको स्याटलाइट पुञ्ज लो-अर्थ अर्बिट अर्थात् लिओ (भिइ) स्याटलाइटको समूहको नामले चिनिन्छ, जसको उद्देश्य इन्टरनेट पहुँच उपलब्ध गराउनु हो ।

अन्तरिक्षका लागि दुई ओटा चर्चित नाम हुन्; एलन मस्कको स्पेसएक्सले तैनाथ गरेको स्टारलिंक र युरोपियन फर्म ईयूटेलस्याटको स्वामित्वमा रहेको वनवेब । इन्टरनेटको पुञ्ज प्रक्षेपणबाट अन्तरिक्षमा चीनको ठूलो महत्त्वाकाङ्क्षालाई दर्साउँछ । प्रविधिमा रहेको दुई देशबीचको होड अनुरूप बेइजिङले यो क्षेत्रमा रहेको अमेरिकी दबदबालाई चुनौती दिएको छ ।

सन् २०२० मा चीनले अमेरिकी सरकारको स्वामित्वमा रहेको ग्लोबल पोजिसनिङ सिस्टम-जीपीएस (जुन विश्वव्यापी रूपमा धेरै मात्रामा प्रयोगमा छ) को प्रतिस्पर्धीको रूपमा स्याटलाइटको एउटा समूहको रूपमा बेइडु नेटवर्क तयार पारेको थियो । यसै वर्षको चीनले पठाएको चाङ ई-सिक्स चन्द्रमाको सुदूर भागबाट अन्वेषणका लागि पहिलो पटक नमुनाहरू लिन मङ्गलबार मात्रै पृथ्वीमा फर्कियो । बेइजिङले सन् २०३३ सम्म मङ्गल ग्रहमा चालक दल सहितको मिसन पठाउने योजना बनाएको छ ।

## शेख हसिना......

बसिन् । उनी केही समय अमेरिका गइन् । र, २००६ मा स्वदेश फर्केको दुई वर्षपछि चार पार्टीको गठबन्धन बनाएर चुनाव जितिन् र लगातार सत्तामा रहिन् । स्वतन्त्रता संग्रामसँग जोडिएको दल अवामी लिगको सभापति उनी सन् १९८४ देखि नै छिन् ।

प्रधानमन्त्री शेख हसिना विश्वकै सर्वश्रेष्ठ शक्तिशाली महिलाको सूचीमा थिइन् । सन् २०१६ मा फोर्ब्स पत्रिकाले विश्वका १०० जना शक्तिशाली महिलाको सूची प्रकाशित गरेको थियो, जसमा उनी शीर्ष २६ औं स्थानमा थिइन् । सन् २०१७ मा सार्वजनिक गरेको सूचीमा भने उनी ३० औं स्थानमा रहिन् ।

हसिनालाई अमेरिकाको एक पत्रिकाले विदेश नीतिको आधारमा विश्वका शीर्ष १०० विचारकहरूको सूचीमा समेत सामेल गरेको थियो । हसिना विश्व महिला नेत्री परिषदकी सदस्य पनि हुन् । यो परिषद वर्तमान र पूर्वमहिला राष्ट्राध्यक्ष तथा प्रधानमन्त्रीहरूको एक अन्तर्राष्ट्रिय सञ्जाल हो ।

बङ्गलादेशका प्रथम राष्ट्रपतिकी छोरी हसिनाले पढाइमा राम्रो अवसर नपाउने कुरै भएन । शुरुमा उनले पूर्वी पाकिस्तानको टुङ्गिपाडाकै विद्यालयबाट प्रारम्भिक शिक्षा लिएकी थिइन् । सन् १९५४ देखि उनी परिवारका साथ ढाकामा बसोबास गर्न थालिन् । पछि पिता रहमान स-परिवार मिन्टो सडकमा रहेको एक सरकारी निवासमा सरे । त्यसपछि हसिना थप शिक्षाका लागि नारी शिक्षा मन्दिर कन्या विद्यालयमा भर्ना भइन् । रहमानको परिवार सन् १९६१ देखि ढाकाको धानमोन्डीस्थित अर्को घरमा बसाइँ सर्यो ।

हसिनाले सन् १९७३ मा ढाका विश्वविद्यालयबाट स्नातकोत्तर सकिन् । विश्वविद्यालयमा अध्ययनरत हुँदा उनको विवाह वाजेद मियाँसँग भयो । हसिना र वाजेदका तर्फबाट सजीव वाजेद जोय र सायमा वाजेल पुतुल नामक दुई सन्तान जन्मिए । सन् २००९ मा उनका वाजेदको मृत्यु भयो ।

शेख हसिना दक्षिण एसियाली राष्ट्र बङ्गलादेशमा लामो समय सत्ता चलाउने प्रधानमन्त्री हुन् । बङ्गलादेशकी १० औं प्रधानमन्त्री बनेकी उनले सन् २००९ जनवरीबाट सत्ता सम्हालेकी हुन् । उनी बङ्गलादेशको इतिहासमा सबैभन्दा लामो समयसम्म प्रधानमन्त्री पदमा रहने व्यक्ति हुन् । हसिनाको जन्म सन् १९४७ सेप्टेम्बर २८ का दिन पूर्वी बङ्गाल (तत्कालीन पाकिस्तान) को टुङ्गिपाडा भन्ने ठाउँमा भएको थियो । उनी हाल ६७ वर्ष पुगेकी छिन् । पहिलोपटक प्रधानमन्त्री बन्दा उनी ४७ वर्षकी थिइन् ।

हसिना बङ्गलादेशका प्रथम राष्ट्रिय शेख मुजिबुर रहमानकी छोरी हुन् । बंगलादेशमा सन् १९७५ अगस्त १५ मा सैनिक विद्रोह भएको थियो । उक्त विद्रोहमा उनका पितासहित परिवारका सबै सदस्यको हत्या भएको थियो । यो हत्यामा अमेरिकी गुप्तचर संस्था सीआइएको समेत हात रहेको बताउने गरिए पनि नेपालको दरबार हत्याकाण्डजस्तै अहिलेसम्म रहस्यमै रहेको छ ।

परिवारको बंशनाश हुँदा हसिना र उनकी बहिनी शेख रेहाना भने जर्मनीमा पढिरहेका थिए । विदेशमा रहेकै कारण दिदी-बहिनी दुईजना हत्या हुनबाट बचे । अन्ततः विदेशमा पढेर फर्केपछि हसिना राजनीतिमा लागिन् र पटक-पटक गरेर २० वर्षसम्म प्रधानमन्त्री बनिन् ।

गत जुलाईदेखि बंगलादेशमा चर्केको आन्दोलन आइतबार उत्कर्षमा पुग्दा हसिनाको अवस्था झण्डै १९७५ को सैनिक विद्रोहका बेलाको जस्तै भयो । प्रधानमन्त्री भवनमा आन्दोलनकारीहरु प्रवेश गर्न थालिसकेका थिए । आन्दोलनमा दमन गर्न हसिनाले सेना परिचालन गर्न खोजे पनि सेनाले गोली चलाउन अस्वीकार गरेपछि हसिनाले सुरक्षाका लागि देशै छाड्नुपर्यो । र, उनी आफ्नी बहिनी शेख रेहानालाई लिएर हेलिकोप्टर चढेर भारतको त्रिपुरातिर भागिन् र बच्न सफल भइन् ।

हसिनाको राजनीतिक जीवन करिब चार दशक भन्दा लामो छ । उनी जर्मनीमा पढेर स्वदेश फर्केपछि सन् १९८६ देखि १९९० सम्म संसदमा प्रतिपक्षी दलको नेता बनिन् । त्यस्तै, सन् १९९१ देखि १९९५ सम्म पुनः प्रतिपक्ष दलकै नेताका रूपमा संसदमा प्रतिनिधित्व गरिन् । हसिना सन् १९८१ देखि अवामी लिगको सभापति बनिन् ।

सन् १९९६ देखि सन् २००१ सम्म हसिनाले पहिलोचोटि बङ्गलादेशकोप्रधानमन्त्रीकोजिम्मेवारी सम्हालिन् । सन् २००८ मा बहुमत ल्याएर उनी दोस्रोपटक प्रधानमन्त्री पदमा निर्वाचित भइन् । सन् २०१४ जनवरीमा एक विरोधी दलविहीन निर्वाचन जितेर उनी तेस्रोपटक प्रधानमन्त्री पदमा निर्वाचित भइन् । उक्त चुनाव विपक्षी दलले बहिस्कार गरेका थिए । अन्तर ाष्ट्रिय पर्यवेक्षकहरूले पनि उक्त चुनावमा धाँधली भएको ठहर गर्दै आलोचना गरे ।

सन् २०१८ मा भएको चुनावमा हसिना चौथो कार्यकालका लागि प्रधानमन्त्री निर्वाचित भइन् । उक्त निर्वाचनमा पनि विपक्षी दलले धाँधली भएको आरोप लगाए । २४ जनवरी २०२४ मा सम्पन्न पछिल्लो चुनावपछि हसिना फेरि दुई तिहाई बहुमतका साथ सत्तामा रहिन् ।

आफ्नो शासनकालमा हसिनाले आर्थिक विकासका लागि प्रशंशनीय कामहरु गरिन् । करिब १७ करोड जनसंख्या रहेको बंगलादेशलाई हसिनाले 'एशियाको टाइगर' बनाउँदै भारतसँग पनि कतिपय मामिलामा टक्कर गर्न सक्ने बनाएकी थिइन् । तर, प्रधानमन्त्रीका रूपमा उनको कार्यकाल विवादरहित हुन सकेन ।

खासगरी, देशमा धेरै किसिमका भ्रष्टाचार र घोटालाहरू भए । पदमा सेतु काण्ड, हलमार्क सनाली बैंक काण्ड, शेयर बजार काण्ड, रानम प्लाज ध्वंस र बङ्गलादेश सडक सुरक्षा आन्दोलन आदि उनको शासनकालका केही कुख्यात काण्डहरू हुन् । लोकतान्त्रिक दृष्टिकोणले हसिनामाथि अधिनायकवादी बनेको आरोप लाग्यो । उनको कार्यकालमा सरकारी दमनका घटना प्रशस्त भए । त्यसैको एकमुष्ट प्रतिफलका रुपमा सडक आन्दोलन चर्कियो र दुईतिहाई बहुमतवाला सत्ता अन्ततः सडकबाटै पल्टियो ।

त्यसो त बंगलादेशको सत्तापलटले भारतमा के असर पर्छ भनेर दिल्लीमा विश्लेषण भइरहेको छ । अहिले भारतीय टेक्सटाइल उद्योग र औषधि उद्योगका व्यापारीहरु बंगलादेशको अस्थिर राजनीतिको फाइदा उठाउने दौडमा रहेको केही बिश्लेषकहरुले गरेको छ । किनकी यी उद्योगको उत्पादनमा बंगलादेशको हिस्सा ठूलै रहेको थियो । हाल भारतले बंगलादेशसँगको सीमा क्षेत्रमा सेनाको तैनाथी बढाएको छ । नेपालबाट पनि बंगलादेशमा मेडिकल क्षेत्रमा पढ्न जाने विद्यार्थीहरु यसअघिदेखि नै प्रभावित भइसकेका छन् । अब त्यहाँको सत्ता पलटले नेपाली विद्यार्थीहरुको भविष्यमा थप असर पर्न सक्ने देखिन्छ । राजनीतिक रुपमा पनि बंगलादेशको घटनाले नेपालमा तरंग ल्याएको छ । ०३६ सालमा पाकिस्तानको राजनीतिक घटनाले काठमाडौंमा विद्यार्थी आन्दोलन चर्केजस्तै बंगलादेशबाट उत्साहित भएर सडकमा सरकारविरुद्ध प्रदर्शनको खतरा काठमाडौं पनि देखा नपर्ला भन्न सकिन्न । तर, जननिर्वाचित बहुमतको सरकार सडक आन्दोलनबाट फालिनु लोकतन्त्रका लागि सुखद घटना भने होइन । हसिनाको सरकार ढलेर अर्को उदार, कम भ्रष्ट र जनमुखी सरकार बन्न सकेको भए त्यो परिवर्तन सही हुन सक्थ्यो, तर लोकतन्त्र सेनाको हातमा गएको छ र झनै अनुदार दलहरु सत्तामा आउने सम्भावना देखा परेको छ ।

त्यसैले बंगलादेशमा हसिनाको सरकार ढले पनि 'अबको बाटो के ?' भन्ने प्रश्न निकै नै जटिल देखिएको छ । दक्षिण एशियन टाइगर'को अबको भविष्य के ? यो प्रश्नको जवाफका लागि 'पर्ख र हेर'को नीति लिनैपर्ने हुन्छ ।

# सिटीका अल्भारेज एट्लेटिको मड्रिडमा अनुबन्ध

काठमाडौं । स्पानिस क्लब एट्लेटिको मड्रिडले इंग्लिस क्लब म्यानचेष्टर सिटीका फरवार्ड जुलियन अल्भारेजलाई अनुबन्ध गर्ने भएको छ । अल्भारेजका लागि एट्लेटिकोले ८१.५ मिलयन पाउण्ड तिर्न सहमत भएको बीबीसीले जनाएको छ । एट्लेटिकोले सुरुमा ६४.४ मिलियन पाउण्ड तिर्ने र बाँकी १७.१ मिलियन पाउण्ड पछि तिर्नेगरी सहमति भएको हो ।

सिटीले कुनै पनि खेलाडीको बहिर्गमनबाट पार्ने यो कीर्तिमानी रकम हुनेछ । यसअघि चेल्सीले सिटीका रहिम स्टर्लिङका लागि ५० मिलियन पाउण्ड खर्च गरेको थियो ।

पेरिस ओलम्पिकमा अर्जेन्टिनाको यू २३ टिमबाट खेलेका अल्भारेजले ओलम्पिकपछि आफ्नो भविष्यको निर्णय गर्ने बताएका थिए । अर्जेन्टिना फ्रान्ससँग क्वाटरफाइनलमा पराजित हुँदै पेरिस ओलम्पिकबाट बाहिरिएको थियो ।

सिटीका प्रशिक्षक पेप ग्वार्डिओलाले २४ वर्षीय अल्भारेजलाई क्लबमै राख्न चाहेका थिए र नयाँ सिजनका लागि अल्भारेजलाई पनि गणना गरेको बताएका थिए । तर सिटीले क्लब छाड्ने कुनै पनि खेलाडीलाई रोक्ने प्रयास गरेको छैन । यसअघि इक्ले गुन्डोगान, रियाद महारेज र एमरेक लापोर्टाको हकमा पनि यस्तै भएको थियो ।

एट्लेटिको मड्रिडले चेल्सीका मिडफिल्डर कोनोर गालेघरलाई पनि अनुबन्ध गर्नका लागि सहमति गरिसकेको छ । अर्जेन्टाइन फरवार्ड अल्भारेजले सन् २०२२ मा रिभर प्लेटबाट सिटीमा अनुबन्ध भएका थिए । जहाँ उनले १०६ खेल खेल्दै ३६ गोल गरेका थिए ।

अल्भारेजले सिटीमा पहिलो सिजनमै क्लब ट्रेबल जितेका थिए । यस्तै सन् २०२० मा अर्जेन्टिनाले फिफा विश्वकप जित्दा उनी टिमको सदस्य थिए ।

# नेपाल फाइनलमा, उपाधिका लागि भारतसँग भिड्ने

काठमाडौं । इरानलाई सोझो सेटमा हराउँदै मंगलवार नेपाल काभा महिला भलिबल नेसन्स लिगको फाइनलमा प्रवेश गरेको छ । नेपालले आज उपाधिका लागि दक्षिण एसियन जाइन्ट भारतको सामना गर्नेछ । जारी प्रतियोगितामा नेपालको यो चौथो जित हो । अब उपाधिको लागि नेपाल एक जित टाढा रहेको छ ।

इरानसँग लिग चरणमा भोगेको हारको बदला लिंदै फाइनलमा पुग्ने सोचमा रहेको नेपालले सुरूवात राम्रो गर्यो । नेपाली टिमले आमविश्वासी प्रदर्शनमा पहिलो सेटमा इरानको युवा टोलीलाई २५-२१ ले हरायो ।

नेपालले खेलमा १-० को अग्रता बनायो । दोस्रो सेट नाटकीय बन्यो । नेपालले एक समय बनाएको ६ अंकको अग्रता गुमाउँदा इरानले २४-२१ को अग्रता बनायो । इरान सेट प्वाइन्टको लागि मात्र एक अंकको खोजीमा थियो । तर नेपालले लगातार ३ अंक जोडेर खेललाई २४-२४ मा पुर्यायो । संगठित प्रदर्शनमा नेपालले यो सेट २८-२६ ले जित्दै खेलमा २-० को स्पष्ट अग्रता बनायो ।

तेस्रो सेट सुरूवातमा प्रतिस्पर्धात्मक बन्यो । तर नेपालले इरानलाई मौका नै दिएन र २५-२० ले हराउँदै सोझो सेटको जित दर्ज गर्यो । नेपाल लिग चरणमा दोस्रो हुँदै र इरान तेस्रो भएर सेमिफाइनलमा प्रवेश गरेका हुन ।

त्यस्तै प्रमुख दाबेदार भारत श्रीलंकालाई सोझो सेटमा हराउँदै काभा महिला भलिबल नेसन्स लिगको फाइनलमा प्रवेश गरेको छ । जारी प्रतियोगितामा श्रीलंका भारतसँग पराजित भएको यो दोस्रो पटक हो । त्रिपुरेश्वरस्थित राष्ट्रिय खेलकुद परिषदको कभर्ड हलमा भएको पहिलो सेमिफाइनल खेलमा श्रीलंकासँग सोमबार लिग चरणमा भोगेको हारको बदला लिने अवसर थियो ।

जहाँ सुरूवाती केहि समय श्रीलंकाले भारतलाई चुनौति दियो । खेलमा ७-६ को अग्रता पनि बनायो । तर यसपछि भारतले लगातार ८ अंक जोडेपछि भारतले १४-७ को आरामदायी अग्रता बनायो । यही अग्रतामा भारतले पहिलो सेट २५-१५ ले जित्यो ।

१-० ले पछि परेको श्रीलंका दोस्रो सेटमा पनि खेलमा फर्कन सकेन । श्रीलंकाले खेलाडी परिवर्तनमा पनि जोड दियो । यसले पनि बलियो भारतलाई रोक्न श्रीलंका असफल नै रहयो । दोस्रो सेट भारतले २५-१६ ले आफ्नो पक्षमा पार्यो ।

२-० पछि परेपछि श्रीलंकाले तेस्रो सेटको सुरूवातमा भारतलाई चुनौति दिंदै श्रीलंकाले १२-८ को अग्रता बनाएको थियो । तर ४ अंकको यो अग्रतालाई श्रीलंकाले केहि बेरमा नै गुमायो । भारतले अन्त्यतिर सहजै अग्रतालाई बढाउँदै २५-२३ ले माथ दिंदै सोझो सेटको जितमा अन्तिम दुईमा स्थान बनाउन सफल रहयो ।

## प्रतिनिधिसभा.......

घण्टाघर भएर नेपाल प्रज्ञा प्रतिष्ठानको सभाहलमा पुगेर मूल समरोहमा परिणत हुने जानकारी दिए । नेपाल आदिवासी जनजाति महासंघले 'संविधान प्रदत्त अधिकार आदिवासीहरुको बिशेष, संरक्षित र स्वायत्त क्षेत्र कार्यन्वयन गर, प्रदेश र स्थानीय तहको सरकारी कामकाजको भाषामा आदिवासी जनजातिको भाषा लागू गर' भन्ने मुल नारा सहित सप्ताव्यापी रुपमा विभिन्न कार्यक्रमको समेत तालिका सार्वजनिक गरेको छ ।

पत्रकार सम्मेलनकै क्रममा संबोधन गर्दै महासंघका अध्यक्ष गेल्जे शेर्पाले यस वर्षको विश्व आदिवासी दिवस संविधान प्रद्धत्त आदिवासीका अधिकार प्राप्तीका लागि मनाउने बताए । उनले महासंघले स्थानीय, प्रदेश र संघमासमेत संविधानमा भएका आदिवासीका अधिकारहरु ऐन बनाई लागु गर्न दबाव दिने बताए ।

सोही अवसरमा बोल्दै महासंघका बरिष्ठ उपाध्यक्ष बुद्ध घर्ती भुजेलले संयुक्त राष्ट्रसंघले घोषणा गरेको भाषा दशकका सम्बन्धमा महासंघ लगायत आदिवासी जनजाति आयोग, भाषा आयोग र विभिन्न भाषासम्बन्धि काम गरिरहेका संघसंस्थाको समन्वयमा सरकारलाई कार्ययोजना बनाउन झक्झकाई रहेको जानकारी दिए । संयुक्त राष्ट संघले सन् २०२२ देखि २०३२ सम्मलाई आदिवासीको भाषा दशकको रुपमा घोषणा गरेको छ ।

महासंघका वरिष्ठ उपाध्यक्ष भुजेलले सरकार आदिवासी मातृभाषाका सम्बन्धमा कार्ययोजना बनाउन बेवास्ता गरिरहेका कारण भाषा दशकको दुईवर्ष पुग्दा समेत कामकार्य अगाडी बढाउन कठिनाई भएको बताए । भाषा दशकका सम्बन्धमा महासंघले सरकारमा पहल गरिरहने उनले जनाए ।

आदिवासी दिवस हरेक वर्षको अगस्ट ९ मा विश्वभरका आदिवासी समुदायले भव्यताका साथ मनाउने गरिन्छ । संयुक्त राष्ट्रसंघले ९ अगस्ट १९९४, का दिनलाई विश्व आदिवासी दिवस घोषणा गरेबाट विश्वभरका आदिवासीले यो दिवश मनाउँदै आएको हुन् । संयुक्त राष्ट्र संघले भने एचयतभअतष्लन तजभ च्ष्नजतक या क्ष्लमष्नभलयगक एभयउभिक ष्ल ख्यिगिलतबचथ क्षयबितष्यल बलम क्ष्लष्तष्बि ऋयलतबअत अर्थात 'स्वेच्छिक रुपमा राज्यबाट अलग र प्रारम्भिक सम्पर्कमा रहेका आदिवासी जनजातिको अधिकारको संरक्षण' भन्ने नारा अघि सारेको छ ।

## नवदुर्गा....

उनले पैसा राखिदिएर खम्ये ल्याएको जानकारी दिए । महिषासुरको प्रतीकका रुपमा खम्ये जात्राका लागि मन्दिरमा चढाउने राँगो ठूलो र निख्खर कालो हुनुपर्छ । यसका लागि सधैं तलेजु मन्दिरका पदाधिकारीको संलग्नतामा विभिन्न ठाउँमा भनेजस्तो राँगो खोजिन्छ र आवश्यक पैसा इच्छाएको व्यक्तिले राखिदिने चलन छ ।

भगवानलाई चढाएपछि पुण्य पाइने भएकाले भाकल गरी भक्तालुले पैसा तिरेर राँगो चढाइदिने चलन छ । वर्षेनी यसैगरी श्रद्धालु भक्तजनले खम्ये जात्राका लागि राँगो दिने गरेका छन् । प्रत्येक वर्ष राँगो किनेर नवदुर्गा मन्दिरमा चढाउन प्रतिस्पर्धाजस्तै हुन्छ । चढाउन चाहने भक्तजनले क्रमबद्ध रुपमा राँगो चढाउन सक्ने व्यवस्था नवदुर्गा मन्दिरमा मिलाइएको छ ।

महिषासुरको प्रतीक खम्ये नौरथाको नवमी कालरात्रीमा वध गरिन्छ । यसअघि नवमीमा द्योछेंबाट नगरभरि राँगोलाई दौडाई जात्रा गरिन्छ । नगर परिक्रमापछि नगरको पूर्वस्थित ब्रम्हायणीमा लगेर राति राँगो वध गरिन्छ । यसलाई स्थानीय नेपालभाषामा खम्ये जात्रा भनिन्छ ।

दौडाउनु अघि राँगालाई रक्सी खुवाएर मात्न लगाइन्छ । मातेको राँगोलाई मानिसहरुको हुलकासाथ दौडाएर लगिन्छ । यो क्रममा बाटोभरि हजारौं नगरबासी दुवै छेउमा बसेर जात्रा हेर्न गर्छन् ।

नवमीको राति ब्रम्हायणीमा राँगाको वध गरेपछि भोलिपल्ट विजया दशमीका दिन त्यहाँ ठूलो मेला लाग्छ । मेला भर्न दसौं हजार श्रद्धालु ब्रम्हायणी पुग्छन् । दशमीमा मेला भर्न ब्रम्हायणीमा भक्तपुरसहित काठमाडौं, ललितपुर, काभ्रेपलान्चोकलगायत छिमेकी जिल्लाबाट त्यहाँ पुग्छन् । राँगाको मासु जात्रामा विभिन्न जिम्मेवारी वहन गर्ने कसाइदेखि नवदुर्गाको मखुन्डो बनाउने चित्रकारसम्म सबैलाई बाँडिन्छ ।

## कमजोर......

जिल्ला प्रशासन कार्यालय भक्तपुरले दिएको जानकारी अनुसार जिल्ला प्रशासन कार्यालय भक्तपुरको प्रमुख जिल्ला अधिकारी सिडिओमा रोशनीकुमारी श्रेष्ठ, भक्तपुर अस्पतालको प्रमुखमा मेडिकल सुपरिटेण्डण्ट डा सुमित्रा गौतम प्रमुख रहेका छन् । साथै शिक्षा विकास तथा समन्वय एकाई प्रमुखमा कमला ज्ञवाली, स्वास्थ्य कार्यालय प्रमुखमा अस्मिता ओझा, राष्टिय कला संग्राहलयको संग्राहलाय प्रमुखमा जयन्ती श्रेष्ठ प्रधानले कार्यालय हाकिरहेका छन् । यस्तै स्मारक संरक्षण तथा दरवार हेरचाह कार्यालय स्मार अधिकृतमा अरुणा नकर्मी, जिल्ला हुलाक कार्यलयको हुलाक अधिकृतमा सीता साम्वा, भक्तपुर औद्योगिक क्षेत्र व्यवस्थापन कार्यालय कार्यकारी अधिकृतमा मेरिना चित्रकारले नेतृत्व गरिरहेका छन् । साथसाथै गुठी संस्थान शाखा कार्यालय भक्तपुरको कार्यालय प्रमुखमा खीमा वली, व्यवसायिक किट विकास फार्म चितपोल भक्तपुरको बरिष्ठ बाल संरक्षण अधिकृतमा सुलोचना श्रेष्ठ र प्रहरी बृत जगाती भक्तपुरको प्रहरी नायव उपरीक्षक (डीएसपी)मा दिप्सी कार्कीले नेतृत्व गरिहेका छन् ।

भक्तपुरकी प्रमुख जिल्ला अधिकारी सिडिओ रोशनीकुमारी श्रेष्ठले जिल्लामा सवैभन्दा वढी महिला कार्यालय प्रमुखहरु अहिले रहेको जनाइन् । महिला हाकिम मात्रै नभई उनीहरुले उत्कृष्ट कामहरुसमेत गरिरहेको दावी उनले गरिन् । यसो हेर्दा सामान्य काम होस् अथवा पृथक नै काम किन नहोस् महिला हाकिमसावहरुले गरिरहनुभएको छ, उनले भनिन्, दैनिक विहान १० बजे नै नियमित कार्यालय पुग्नेमा म पनि एक छु, चाहे यो हेर्दा सामान्य नै काम किन नहोस् ।

जिल्ला प्रशासन कार्यालय भक्तपुरले आइतबार जिल्लाका महिला कार्यालय प्रमुखहरु र पत्रकारहरुवीच अन्तरक्रियासमेत आयोजना गरेको थियो । अन्तरक्रियामा जिल्लाका महिला कार्यालय प्रमुखहरुले आफूले गर्दै आएका कामको विवरण पत्रकारहरुलाई सुनाएका थिए । साथै उनीहरुले गरेका फरक कामहरुकोबारेमा पनि उनीहरुले पत्रकारहरुलाई जानकारी गराएका थिए ।

## एक महिना......

अन्तिम दिन ललितपुरको बुङ्मती, कार्यविनायक, खोकना, जलविनायक हुँदै चोभारको करुणामय (आदित्यनाथ) परिक्रमा गर्ने पनि परम्परा छ ।

गुँला समाप्तिका दिन हर्ष उमङ्गका साथ भोज खाने चलन छ यस भोजलाई पारु भोज पनि भनिन्छ ।

गुँला कहिलेबाट सुरु भएको भन्ने यकिन नभए पनि भाषा वंशावलीअनुसार राजा विक्रमदेवले बौद्ध अनुयायीका लागि यो पर्व चलाएका थिए भन्ने उल्लेख छ । किंवदन्तीअनुसार मञ्जुश्रीले तालका रूपमा रहेको उपत्यकाको पानी बगाएपछि यहाँ बस्ती सुरु भएको हो । उनैबाट चैत्यसेवाको पनि प्रारम्भ भएको थियो र पछि यसले नै गुँलापर्वको रूपमा लिएको भनाइ रहेको पाइन्छ ।

यस्तै प्राचीनकालमा काठमाण्डौं उपत्यका नागदह नामले प्रसिद्ध थियो, जुन नागदहमा चैत्र शुक्ल पूर्णिमाको दिन विपश्वी बुद्धले कमलको बीज रोपेका थिए, त्यसैबाट कमल उत्पत्ति भई त्यस कमलबाट स्वयम्भूको ज्योति प्रादुर्भाव भएको वंशावलीमा उल्लेख छ । उक्त कमलको बीजबाट अङ्कुर पलाएको गठेमङ्गलको दिन मानिन्छ । त्यसैले गठेमङ्गललगत्तै स्वयम्भू महाचैत्यमा गुँलाधर्मको मेला लाग्छ । यो अङ्कुर एक महिनापछि जलको माथिल्लो सतहमा प्रादुर्भाव भएको हुनाले एक महिनासम्म त्यस स्वयम्भू स्थानमा मेला रहन्छ ।

गुँलामा शृङ्गभेरी अर्थात् सिङ बाजा फुकाउने चलन राजा सिद्धिनरसिंह मल्लले सुरुवात गरेको परम्परा मानिन्छ । शृङ्गभेरी कथाअनुसार मृतकको नाममा स्वयम्भू महाचैत्यमा शृङ्ग बाजा बजाई परिक्रमा गर्ने र पूजा गर्ने चलन छ ।

एक किंवदन्ती अनुसार ब्राह्मण कुलमा जन्मिएकी रूपवती एक दिन जङ्गलमा भैंसी चराउन पुगिन् । यसै क्रममा भैंसी भीरबाट खसेर मरकाले उनी भैंसी मरेको दुःखका रुँदै बसिरहेकी थिइन् । त्यहाँ रूपवतीलाई देखेर बोधिसत्व प्रकट भएर हेर्दा रूपवती पुर्वजन्ममा रानी थिइन् भने भैंसी पूर्वजन्ममा रूपवतीको लोग्ने राजा भएको बताउँछन् । पूर्वजन्ममा पापकर्म गरेको कारण भैंसीको जुनी भएर जन्म लिएको हुनाले बोधिसत्वले भने, उदार गर्ने भए भैंसीको सबै हड्डीहरू राखेर एउटा चैत्य बनाई एउटा सिङ फुकाउने र अर्को सिङमा २१ दिनसम्म जल राखेर सो जल निर्माण गरेको चैत्यमा चढाएमा पूर्वजन्ममा तिम्रो लोग्ने राजाले गरेको पापमुक्त हुन्छ भनेपछि रूपवतीले गुँला अवधिभर सिङ फुकेर यसका साथसाथै अन्य बाजा बजाएर चैत्य परिक्रमा गर्ने परम्परा सुरु भएको कथन रहेको पाइन्छ ।

गुँलामा बजाइने विशेष गुँलाबाजा धाः यस पर्वसँग सम्बन्धित रहेको देखिन्छ । भगवान् बुद्धको जन्मस्थल लुम्बिनी कपिलवस्तुमा गुँला बाजा बजाउने चलन थियो । जुन गुँला बाजाको ताल सिद्धार्थ राजकुमारलाई निकै मन पर्दथ्यो भन्ने भनाइ छ । पछि शाक्य गणराज्यको पतन भएपछि शाक्य र कोलियाहरू काठमाण्डौं उपत्यकामा आई बसोबास गरेपछि यहाँ पनि बहाबहीमा यही धाः बाजा बजाउने परम्परा रह्यो । जुन चलन यद्यपि छँदैछ ।

गुँलाभरी स्वयम्भू महाचैत्यसँगै रहेको हारती अजिमालाई पनि विशेष रूपले पूजा गर्ने गरिन्छ । यससम्बन्धी एउटा जनश्रुति अनुसार प्राचीनकालमा हारती अजिमाले १०८ जना सन्तान बच्चा पाल्नका लागि अरू मानिसहरूको बच्चा चोरेर खाने गर्दै आएको रहेछ । बच्चा हराएर रोइकराई गरेका आमाबाबुहरूको दुःख हेर्न नसकेर बुद्ध भगवानले अजिमाका सबै बच्चाहरू गुँला अवधिभर लुकाइदिए । पछि अजिमाले थाहा पाएर भगवान् बुद्धसँग बिन्तीभाव गरी अजिमाले आफ्नो बच्चाहरू फिर्ता मागे ।

भगवान् बुद्धले भने आफ्नो सन्तानको कति माया हुँदोरहेछ, यस्तै अरूलाई पनि आफ्नो सन्तानको उतिकै माया हुन्छ भनेपछि अब उप्रान्त अन्य अरू कसैका बच्चाहरूको उद्धार गर्ने वचनबद्धता गराएर अजिमालाई मनपर्ने छ जना मात्र बच्चा फिर्ता दिई बाँकी बच्चा अजिमाको मन्दिर अगाडि रहेको मण्डपमा गाडेर छोपिदिए । त्यसबेलादेखि हारती अजिमाले सबै बच्चाहरूको हेरचाह रक्षा गर्दै आइरहेको मानिन्छ । सोही बेलादेखि हारतीमातालाई पूजा गर्ने बेलामा १०८ जना बच्चालाई पनि खुवाउने हिसाबले मन्दिर अगाडिको मण्डपमा पनि एक प्रकारको खानेकुरा चढाएर पूजा गर्दै आइरहेको भनाइ रहेको पाइन्छ ।

गुँला अवधिभर अन्य महिनाको भन्दा धेरै चाडपर्वहरू जोडिएको पाइन्छ । जस्तै नागपञ्चमी, यलपञ्चदान, पूर्णिमामा- गुंपुन्हि (क्वाटी पूर्णिमा), कुम्भेश्वर मेला, सापारुलगायत दीपयात्रा मतयाः, श्रीकृष्ण जन्माष्टमी, पञ्चदान र कुशेऔंसी (बुबाको मुख हेर्ने) यसै गुँला मेलाभित्र पर्छ ।

## नेवार......

तान्त्रिक विधिद्धारा नै बिदा गर्ने पर्वको रुपमा समेत लिईन्छ ।

भक्तपुरमा यो पर्व विशेष प्रकारले मनाउने गर्दछन । यहाँ गठामुंग पर्व मनाउने शैली अन्य स्थानका नेवार समुदायको भन्दा भिन्न प्रकारको छ । यसदिन नेवार समूदायमा एका बिहानै उठेर घरलाई लिपपोट गरी सफा पार्ने र घरका सबैजनाले नुहाएपछि महादेवको मन्दिर पुगेर जल ल्याई आफ्नो घरको सम्पूर्ण भागमा सो जलले छर्केर चोखो बनाउने परम्परा रहेको छ । घर चोखो बनाउने क्रममा दैनिक जीवनमा प्रयोग भईरहेका सम्पूर्ण भाँडाकुडा समेत धोएर चोखो बनाउँछन ।

यसै दिन नेवार समुदायले बौ वाय् ज्या (भुत मन्छाउने कार्य) गर्दछन । काँचो माटोको सानो दहीको कटारो वा सलीचा (एक प्रकारको माटोको भाँडो)मा चिउराको ढुटो, जाँडको कट, लसुन, रातो खुर्सानी, कालो भटमास, रंगीविरंगी ध्वजा, सिन्कामा कपडा बेरेर बनाएको बत्ति बालेर टोल बाहिरको दोवाटो वा चौवाटोमा लगेर राख्ने प्रचलनलाई बौ वाय् ज्या अर्थात भुत पन्छाउने कार्य भनिन्छ ।

बौ वाय् ज्यासँगसँगै घरघरको मुल ढोका र मुख्य निदालमा पंचरंगी मयूरको प्वांख र तिन खुट्टे फलामको किला ठोकेका थिए । यसले घरमा भुत प्रेत पस्न सक्दैन भन्ने जनविश्वास रहेको छ । घरका साना केटाकेटीहरुलाई फलाम वा तामाको औंठी लगाईदिने चलन पनि रहेको छ । वयस्क युवतीहरुले घण्टाकर्णको दिन विशेषगरी खुट्टामा विभिन्न प्रकारका टाटु खोप्ने प्रचलन पनि रहेको छ ।

त्यसैगरी साँझ पख घरघरबाट छ्वाली प्वाः वायगु ज्या (छ्वालीको मुठा बालेर दोवाटोमा फाल्ने कार्य) गरेका थिए । छ्वालीको मुठामा कर्कलो, सिस्नो, मकैको घोगा, आरुको बोटको हाँगा, धुँ स्वाँ र बौ स्वाँ नामको विशेष प्रकारको फुल समेत राखेर सो छ्वालीको मुठालाई बालेर घरको माथिल्लो भागदेखी तल्लो भाग छिँडीसम्म परिक्रमा गराई छ्वास वा दोवाटोमा लगेर सेलाउने गरिन्छ । यसअघि घरका सम्पूर्ण झ्याल ढोकाको कुनाको माटो झिकेर सो माटो झिकेको सानो प्वालमा जौ, तोरीको गेडालगायतका वस्तु राखेर गोवरले लिप्ने प्रचलन समेत रहेको छ । यस पर्वलाई किसानहरुको 'सिनाज्या ब्यंकेगु' (रोपाई कार्य सम्पन्न भएको) र चाडपर्वको शुरुवाट भएको संकेत पर्वको रुपमा पनि लिने गरेको छ । नेवार समुदायमा रोपाई सकेपछि घर सफा गर्ने, हिलो पखाल्ने पर्वका रुपमा सिनाज्या ब्यंकेगु पर्व मनाउने गर्दछ ।

नेवार समुदायमा यो पर्व प्राचिनकाल देखी प्रचलनमा रहेको ईतिहासविद् एवम् संस्कृतिविद् डा. पुरुषोत्तमलोचन श्रेष्ठ बताउँछन । काठमाडौं उपत्यकामा करिव २ हजार वर्ष अघिदेखी यो पर्व मनाउँदै आएको हो । यस पर्वले मानिसमा भएको नकारात्मक सोच र व्यवहार परिवर्तन गर्न उत्प्रेरणा मिल्ने र व्यक्ति, परिवार, समाज र देशमा शान्तिको कामना गर्ने पर्वको रुपमा समेत लिने गरेको संस्कृतिविद् डा. श्रेष्ठको भनाई छ ।

यसै दिनबाट नेवारी समुदायमा परम्परागत नाच तथा बाजागाजा सिकाउन सुरु गरिन्छ । नेवारी समुदायले गाईजात्राका बेला प्रदर्शन गरिने परम्परागत देवीदेवताका नाचसहित व्यंग्यले भरिपूर्ण नाटकको प्रशिक्षण समेत घण्टाकर्ण पर्व पछि सुरु गरिन्छ । भक्तपुरको प्रसिद्ध नवदुर्गा नाचको लागि यसै दिनबाट मुकुण्डो बनाउने कार्यको शुभारम्भ गरिन्छ ।

## भाषाको....

शिक्षा हासिल गरेका, पटकपटक मन्त्री/सांसद भइसकेका, उच्च आर्थिक र सामाजिक हैसियत बनाएका सो वर्गका माथिल्लो तह (क्रिमि लेयर) मा रहेका व्यक्तिहरू नै राज्यका निर्वाचित निकायमा पुग्दा समावेशी राज्य संरचनाको स्थापना गर्ने संविधानको उद्देश्य नै परास्त हुन जाने भएकाले त्यसो हुन नदिन कानुनहरूको पुनरावलोकन गर्न सर्वोच्चले निर्देशनात्मक आदेश दिएको हो ।

संविधान र कानुन अनुसार नै समानुपातिक सांसदहरू निर्वाचित भएको देखिएको भन्दै फागुन ३० गते उक्त रिट खारेज गर्ने आदेश गरेको छ । सोही फैसलाको पूर्णपाठमा समावेशी सिद्धान्तको कार्यान्वयनका लागि संविधानको मर्म र भावना अनुरूप निर्वाचन सम्बन्धी कानुन पुनरावलोकन गर्न आवश्यक रहेको भनेको हो ।

'समानुपातिक समावेशी सिद्धान्तको व्यावहारिक कार्यान्वयनको लागि विद्यमान कानुनमा थप परिमार्जन गरिनु वाञ्छनीय देखिन्छ,' अदालतको फैसलाको पूर्णपाठमा उल्लेख छ । 'आगामी आवधिक निर्वाचन पूर्वप्रतिनिधि सभा सदस्य निर्वाचन ऐन, २०७४ समेतका विभिन्न तहका निर्वाचनसँग सम्बन्धित प्रचलित कानुनमा संविधानको शब्द, भाव र मर्म अनुरूप आवश्यक पुनरावलोकन गर्नू/गराउनू भनी प्रत्यर्थीहरूका नाममा निर्देशनात्मक आदेश जारी हुने ठहर्छ,' सर्वोच्चको पूर्णपाठमा भनिएको छ ।

निर्वाचित निकायहरूमा समाजका अगुवाकै कब्जालाई रोक्नु जरुरी भएको भन्दै सर्वोच्चले समावेशिताको अर्थ गलत रूपमा व्याख्या भएको ठहर गरेको छ । 'आर्थिक, सामाजिक र शैक्षिक दृष्टिबाट पछाडि परेका व्यक्तिहरूलाई राज्यका निकायमा सहभागी गराउने उद्देश्य समावेशिताले राख्छ । समानुपातिक निर्वाचन प्रणालीको मूल उद्देश्य पनि निर्वाचन प्रणालीमार्फत् प्राप्त हुने राज्य सत्ताको सञ्चालनलाई सामाजिक अगुवाहरूको कब्जाबाट छुटाई पछाडि परेका नागरिकहरूमा पुर्‍याउने हो', फैसलाको पूर्णपाठमा भनिएको छ ।

# रोट्रयाक्ट क्लब अफ मध्यपुरको अध्यक्षमा मोनिका कौरी चयन

भक्तपुर, साउन १९ः रोटरयाक्ट क्लब अफ मध्यपुरको अध्यक्षमा मोनिका कौरी चयन भएकी छिन् । शनिबार मध्यपुरमा आयोजित १३औं रोटरयाक्ट पद स्थापन कार्यक्रममा कौरीलाई अध्यक्षमा पद हस्तान्तरण गरिएको हो । कार्यक्रममा रोटरी क्लबका अध्यक्ष गीता प्रसाद नेपालको प्रमुख आतिथ्यता, रोटरयाक्ट प्रतिनिधि रोशन कार्की, चन्द्र भक्त अधिकारी, जोनल रोटरयाक्ट प्रतिनिधि सगुन श्रेष्ठ, रोटरी क्लबका निवर्तमान अध्यक्ष नारायण प्रसाद भुसाल लगायतका विशिष्ट व्यक्तित्वहरूको उपस्थिति रहेको थियो ।

जम्मा १८० जना सहभागी रहेको उक्त कार्यक्रममा निवर्तमान अध्यक्ष मनिष प्रजापतिले नयाँ अध्यक्ष मोनिका कोरीलाई पद हस्तान्तरण गरे । निवर्तमान अध्यक्ष प्रजापतिले ६३ वटा परियोजनाहरू (समुदाय सेवा, अन्तर ाष्ट्रिय फेलोशिप ,व्यक्तित्व विकास, क्लब प्रशासन, सदस्यता, व्यावसायिक विकास) प्रस्तुत गरेका थिए । उनले युवाहरू र व्यावसायिक विकाससँग सम्बन्धित लक्ष्यहरू पूरा गर्नका लागि राष्ट्रिय र अन्तर्राष्ट्रिय संस्थासँग सहकार्य गरेको बताए । यो सबै उनले सम्पर्क गरेका नेटवर्कहरूको समर्थन बिना सम्भव नभएको उनले जनाए ।

रोटरयाक्ट अध्यक्षको शपथ ग्रहण रोटरी अध्यक्ष गीता प्रसाद नेपालले गराइको थियो । अध्यक्ष कौरीले आफ्ना अभिभावकहरू र सबै निवर्तमान अध्यक्षहरूलाई धन्यवाद दिँदै नयाँ बोर्ड अफ डाइरेक्टरको घोषणा गरिन् र शपथ ग्रहण गराइन् ।

निवर्तमान रोटरी अध्यक्ष नारायण प्रसाद भुसालले आफ्नो कार्यकालमा रोटरयाक्टलाई मनदेखि समर्थन गरेको र भविष्यमा पनि क्लब र व्यक्तिगत रूपमा सधैं समर्थन गर्ने बताएका थिए । रोटरी अध्यक्ष नेपालले भने, "रोटरयाक्ट क्लब रोटरी क्लबको आधार र स्तम्भ हो, त्यसैले रोटरी क्लब अफ मध्यपुरले तपाईंहरूको ठूला विचार र योजनाहरूमा सधैं समर्थन गर्नेछ ।"

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# 'स्क्विड गेम' टिजरसँगै दोस्रो सिजनको प्रिमियर मिति घोषणा

काठमाडौं । नेटफ्लिक्सले बहुप्रतीक्षित कोरियाली सिरिज 'स्क्विड गेम'को दोस्रो सिजनको प्रिमियर मिति घोषणा गरेको छ । बिहीबार एक टिजर सार्वजनिक गर्दै निर्माताले डिसेम्बर २६ मा दोस्रो सिजन आउन लागेको जनाएका हुन् । यो डिस्टोपियन सिरिज क्रिसमसलगत्तै दर्शकमाझ आउन लागेको हो । सिरिजको पहिलो भागले नेटफ्लिक्सले एकपछि अर्को कीर्तिमान रचेको थियो । त्यसयता यो सिरिजलाई लिएर विश्वभर पर्खाइ छ ।

नयाँ कुरा के पनि छ भने सिजन ३ सँगै सिरिजको अन्त्य पनि हुनेछ । सन् २०२५ मा फर्किने सिरिजको तेस्रो सिजनमा दोस्रो सिजनकै कलाकारको पुनरागमन हुने पक्का छ ।

सार्वजनिक दोस्रो सिजनको टिजरले सिरिजबारे धेरै कुराको संकेत गर्छ । १७ सेप्टेम्बर २०२१ मा सुरु भएको 'स्क्विड गेम'लाई २८ दिनमा १.६५ बिलियन पटक हेरिएको थियो । यो सिरिजले १११ मिलियन नेटफ्लिक्स एकाउन्टमा पहुँच प्राप्त गरेको थियो ।

पहिलो सिजनको थालनीमै १०० मिलियन पार गर्ने उपलब्धि नेटफ्लिक्सले हासिल गरेको थियो । स्ट्रिमिङ प्लाटफर्मको इतिहासमा यो विश्वव्यापी घटना बन्यो ।

तपाईंले अघिल्लो सिजन हेर्नुभएको छ भने मुख्य पात्र सियोङ जे हुनले खेलकुद प्रतियोगिताबाट निम्तो प्राप्त गर्दा ऊ ऋणमा डुबेको थियो । अनपेक्षित रुपमा खेल जितेपछि उसले यो घातक प्रतिस्पर्धाका अन्य सहभागीसँग बदला लिन थाल्छ ।

# "नमेटिने घाउ"को फस्ट लुक्समा ओली

काठमाडौं । 'नमेटिने घाउ' आगामी भदौ ७ गतेबाट सार्वजनिक प्रदर्शनमा आउने भएको छ । फिल्म अहिले पोस्ट प्रोडक्सनमा छ । अभिनेता रमित ढुङ्गानाको निर्माण निर्देशन रहेको फिल्मले केही दिन अगाडि फस्टलुक्स पोस्टर सार्वजनिक गरेको छ ।

पोस्टरमा प्रधानमन्त्री केपी शर्मा ओलीसँगै प्रहरी उपरीक्षकद्वय बाल नरसिंह राणा र कुमुद ढुङ्गेल, प्रहरी निरीक्षक जेआर शर्मालगायत कलाकार फष्टलुक्समा अटाएका छन् । तर फिल्ममा अभिनय रहेको पूर्व प्रधानमन्त्री माधव नेपाल भने अटाएको छैनन् । फिल्मको फष्टलुक्समा आखिर किन अटाएनन् माधव नेपाल ?

फिल्मको अब दोस्रो पटक सार्वजनिक हुने पोष्टरमा माधव नेपाल समेटिने निर्देशक रमित ढुंगानाले बताएका छन् । 'मेरो र फिल्मका लागि प्रधानमन्त्री केपी शर्मा ओली जस्तै महत्त्वपूर्ण माधव नेपाल पनि हो', रमितले भने 'उहाँको पनि ओलीको जस्तै पोस्टर आउछ ।' माधव नेपाल अटाएको पोस्टर केही दिनमै सार्वजनिक हुने निर्देशक रमितले जानकारी दिए ।

फिल्ममा सांसदद्वय देवेन्द्र पौडेल र ज्ञानेन्द्र शाहीको समेत अभिनय रहेको छ । नेपालपछि सांसदद्वय पौडेल र शाहीको समेत पोस्टर सार्वजनिक हुने रमितको भनाइ छ ।

सत्य घटनामा आधारित फिल्म 'नमेटिने घाउ'मा प्रधानमन्त्री ओली, पूर्व प्रधानमन्त्री नेपालको अलावा मुस्कान खातुन, प्राप्ति पौडेल, इभा गिरी, कमल देवकोटा, सन्दीपबाबु लोहनी, रचना गौतम, प्रभात पाल ठकुरी, आरती आचार्य, अखिल बजगाईं, अपेक्षा न्यौपाने, क्रान्ति शाह, वीरेन्द्र सिंह कुसुहा, लालना चिमोरिया, स्वस्तीमा कार्की, लिजा कोरानी, एलिसा गुरुङ, विशाल देवकोटा, आरजु अधिकारी ,आरजु लेखक लगायतको अभिनय रहेको छ । एसिड सर्भाइभरहरुको वास्तविक जीवनीमा आधारित फिल्ममा एसिड आक्रमणमा परेका ३३ जना पीडितहरूको कथालाई समेटिएर निर्माण भएको चलचित्र हो । रमित ढुङ्गाना फिल्म प्रोडक्शनको ब्यानरमा निर्माण गरिएको फिल्ममा नीरज कँडेलको छायाङ्कन, बनिश शाहको सम्पादन, ओम सुनारको सङ्गीत र किरण ढकालको एक्सन छ ।

# हसिनाले देश छाडेपछि बंगाली सेलिब्रेटीहरुको सामाजिक सञ्जाल

काठमाडौं । शेख हसिनाले प्रधानमन्त्री पदबाट राजीनामा दिएर देशबाट भागेपछि बंगलादेशी सेलिब्रेटीहरुले सामाजिक सञ्जालमा विभिन्न प्रतिक्रिया दिइरहेका छन् । उनीहरुको पोस्टले एकैसाथ राहत, आनन्द र भविष्यका लागि आशाको मिश्रण झल्काउँछ । प्रसिद्ध फिल्म निर्देशक मोस्तफा सरवर फारुकी लेख्छन्, 'जुलाई ६ मा स्वतन्त्र देशमा स्वागत छ । देशको स्वतन्त्रताकी शिल्पकारकी छोरी शेख हसिना कसरी देशको इतिहासमा सबैभन्दा खराब र क्रूर तानाशाह बनिन्, यो कुरा विद्यार्थीले पढ्नेछन् र भविष्यमा राजनीतिज्ञले पाठ सिक्नेछन् ।'

निर्देशक अस्फाक निपुनले भनेका छन्, 'श्रीमती शेख हसिना, देश तपाईंको बुबाको एक्लो होइन, देश हाम्रो पनि हो जो देश छोडेर जाँदैनन्, अल्लाह हाफिज । एक गर्विलो बंगलादेशी ।'

अर्को पोस्टमा उनले लेखेका छन्, 'बंगलादेश तानाशाह र हत्यारा शेख हसिनाको लामो तानाशाहबाट मुक्त भएको छ । यो सम्भव बनाएकोमा कोटा सुधारको माग गर्दै आन्दोलनमा उत्रिएका विद्यार्थी र मेरो देशका जनतालाई धन्यवाद । यो त सुरुवात मात्र हो । हामी हाम्रो सुधार गर्नेछौं । मातृभूमि ।'

फिल्म अभिनेता सियाम अहमदले आफ्नो प्रतिक्रिया छोटो तर प्रभावशाली रुपमा लेखेका छन्- 'बंगलादेश २.० ।'

सामाजिक सञ्जाल सेलिब्रेटी सलमान मोहम्मद मुक्तादिरले आफ्नो प्रोफाइल तस्वीरलाई 'स्वाधीन' (स्वतन्त्र) शब्दको साथ परिवर्तन गरेका छन् । युवापुस्ताप्रति कृतज्ञता व्यक्त गर्दै उनी लेख्छन्, 'जेन-जीले हामी सबैलाई यस पृथ्वीमा हुनसक्ने सबैभन्दा राक्षसी अमानवीय तानाशाहबाट बचाएको छ । उनीहरूले विश्व र अन्य देशले गर्न सक्ने काम गरेका छन् । यसले हामी सबैलाई हाम्रो जीवनप्रति ऋणी बनाउँछ । म जेन-जीलाई सलाम गर्छु ।'

अभिनेत्री सादिया अयमनले आफ्नो खुसी व्यक्त गर्दै भनिन्, 'स्वतन्त्रताको खुसी चारैतिर छ । आहा, शान्ति ! यो मीठो छ !' अहिले सेलिब्रेटीका पोस्टहरु बंगलादेशको सोसल मिडियामा धेरै पढिएका र सुनिएका पनि छन् । 'बंगला सिनेमा' भनिने बंगलादेशको फिल्म र संगीत उद्योग क्षेत्रीय फिल्मको कारण बढी चर्चामा छ । पछिल्लो समय बंगाली फिल्मले विश्वका चर्चित फिल्म फेस्टिभलमा दबदबा जमाइरहेका छन् ।

# "मोदीबेनी" को राइट जापानमा बिक्री भयो

काठमाडौं । शुक्रबार रिलिज भएको नेपाली चलचित्र 'मोदीबेनी' जापानमा रिलिज हुने भएको छ । सुवास लामिछानेको नेतृत्वमा रहेको जापानी कम्पनी 'भिजोनिया कम्पनी लिमिटेड'ले यो चलचित्रको जापान प्रदर्शन अधिकार खरिद गरेको हो ।

चलचित्र रिलिजपछि दर्शकबाट राम्रो प्रतिक्रिया आएका कारण जापान अधिकार बिक्री भएको सह-निर्माता हरि श्रेष्ठले बताए । उनले दर्शकबाट गजबको प्रतिक्रिया प्राप्त भइरहेको बताए । जापानमा केही दिनमा सार्वजनिक प्रदर्शनमा आउने श्रेष्ठले बताए ।

निर्देशक शङ्कर कोइरालाका अनुसार दर्शकले चलचित्रको 'थ्रिलिङ पार्ट'लाई रुचाएका छन् । शुक्रबार र शनिबार दर्शक भेट्न विभिन्न हल पुगेका निर्देशक कोइरालाले 'मोदीबेनी'को 'सेकेन्ड हाफ'लाई बढी रुचाएको पाइएको बताए ।

"चलचित्रको 'सेकेन्ड हाफ'लाई बढी रुचाएको पाएको छु । पहिलो भागमा क्यारेक्टरको बेस तयार गरी दोस्रो भागमा थ्रिलिङ दृश्यहरू राखेका थियौं । सोही कुरा दर्शकलाई चित्त बुझेको छ," कोइरालाले भने । उनले चलचित्रमा उठान गरिएको विषय र विश्वासै नलाग्ने कथामा दर्शकले मनोरञ्जन लिइरहेको प्रतिक्रिया आफूले पाएको बताए । "दर्शकको प्रतिक्रिया बुझ्दा 'वर्ड अफ माउथ'ले राम्रै काम गर्ने देखिन्छ ।"

चलचित्र रिलिजपछि कलाकारहरू वर्षा सिवाकोटी, नव अभिनेता अमर प्रताप श्रेष्ठ, रेजिना उप्रेती लगायत दर्शक भेट्न काठमाडौंका विभिन्न हल पुगेका थिए । चलचित्रलाई डिनेष्ट इन्टरटेन्मेन्टको ब्यानरमा दिलीप केसी र हरि श्रेष्ठले निर्माण गरेका हुन् ।













प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web Portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ अङ्क ०५ ने.सं. ११४४ साउन ३० गते बुधबार, २०८१ 14 Aug. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## विश्व आदिवासी दिवससँगै फोनिजको रजत समारोहमा सम्मान कार्यक्रम सम्पन्न




काठमाडौं । ३० औं विश्व आदिवासी दिवसको मूल समारोहमा नेपालको संविधानमा व्यबस्था भएको विशेष, संरक्षित र स्वायत्त क्षेत्र कार्यन्वयन गर्न आदिवासी अगुवाहरुले बिशेष जोड दिएका छन्। नेपाल प्रज्ञा प्रतिष्ठानको सभाहलमा आयोजित मूल समारोहमा बोल्ने अधिकाँश वक्ताहरुले आदिवासीको अधिकारका सवालमा संविधानमा व्यवस्था भएको व्यवस्था कार्यन्वयन गर्न माँग गर्दे विशेष, संरक्षित र स्वायत्त क्षेत्रको सन्दर्भलाई मूल बिषय बनाएका हुन् ।

नेपाल आदिवासी जनजाति महासंघले दिवसको मूल नारा नै 'संविधानप्रदत्त आदिवासीको विशेष, संरक्षित र स्वायत्त क्षेत्र कार्यन्वयन गर' भन्ने बनाएको थियो । समारोहमा अध्यक्षको आसनबाट महासंघका अध्यक्ष गेल्जे लामा शेर्पाले संविधानमा भएका कतिपय व्यवस्थाहरु कार्यन्वयन नभएका कारण आदिवासीहरुमा निराशा र आक्रोश देखिएको बताए ।

उनले संविधानको मर्म र भावना विपरित समानुपातिक र समावेशी प्रावधानलाई विकृत बनाइएको आरोप लगाए । विपन्न र सीमान्तकृत मधेशीको काटोबाट विनोद चौधरीलाई प्रतिनिधि सभामा पठाइएको र अन्य कतिपय आरक्षित सिटमा नेताका आफन्त र पैसामा चलखेल गरिएको आरोप लगाए । 'एकातिर संविधानमा भएका व्यवस्थाहरु कार्यन्वयन गरिएका छैनन् भने अर्कोतिर संविधान संशोधनका नाममा भएका अधिकार कटौति गर्न खोजिएको छ ।' महासंघका अध्यक्ष शेर्पाले भने -'मातृभाषा प्रयोग गर्न पाउने आदिवासीको मौलिक हकको कार्यन्वयन पनि हुन सकेको छैन ।'

नेपालका आदिवासी जनजातिहरुले पहिचानको लडाई जारी राखेको बताउँदै १ नम्बर प्रदेशमा कोशी नामाकरण अस्वीकार्य रहेको दोहोऱ्याए । उनले आदिवासी जनजाति महासंघले अघि सारेको माँग र मुद्धाको सम्बोधन नभए कडा कदम चाल्ने पनि चेतावनीसमेत दिए ।

कार्यक्रममा प्रमुख अतिथि रहेका उपप्रधान तथा शहरी विकास मन्त्री प्रकाशमान सिंहले संविधान संशोधन राम्रो बनाउनका लागि गर्न लागिएको बताउँदै अहिले भएको आदिवासीको अधिकार कटौति नगरिने वताए । उनले संविधान जारी भए पछि कतिपय प्रावधानहरु कानुन बन्न नसकेर कार्यन्वयन हुन

बाँकी पेज ७ मा

## मेय् प्वाः खनेगु जात्राले निरन्तरता पाउँदै



भक्तपुर । मध्यपुर थिमिको 'येंया पुन्हिया मेय् प्वाः खनेगु जात्रा'ले निरन्तरता पाउने भएको छ । यसवर्ष मध्यपुर थिमिका बासिन्दा विरेन्द्रभक्त श्रेष्ठले मेय् प्वाः खने (जिब्रो छेडाउने) भएको छ। उनले जिब्रो छेडाउन लागेको यो तेस्रो पटक हो । यसअघि पहिलो पटक २०७४ सालमा जिब्रो छेडाएर लोप हुन लागेको जात्रालाई पुनर्जिवित दिएको थियो । उनले दोस्रो पटक २०७९ सालको येंया पुन्हिया मेय् प्वाः खनेगु जात्रामा जिब्रो छेडाएर जात्रालाई निरन्तरता दिएको थियो ।

मध्यपुर थिमिमा आश्विन शुक्ल पूर्णिमाको दिन अर्थात इन्द्रजात्राको भोलिपल्ट साँझ स्थानीय बासिन्दाको जिब्रो छेडाएर 'येंया पुन्हिया मेय् प्वाः

बाँकी पेज ७ मा

## अंग प्रत्यारोपण सेवा सातै प्रदेशमा विस्तार गर्दै लगिने–स्वास्थ्यमन्त्री



भक्तपुर । आज अगष्ट १३ अर्थात् विश्व अंगदान दिवस । भक्तपुरको दुधपाटीस्थित शहीद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्रले आज विश्व अंगदान दिवसको अवसरमा एक कार्यक्रम आयोजना गऱ्यो । उक्त कार्यक्रमको उद्घाटन स्वास्थ्य तथा जनसंख्या मन्त्री प्रदिप पौडेलले गर्नुभयो ।

प्रमुख अतिथि पौडेलले अंगदाता परिवारहरुलाई सम्मानपत्र हस्तान्तरण गर्दै भक्तपुरलाई अंग प्रत्यारोपणको केन्द्र बनाई सातवटै प्रदेशमा यसका उपकेन्द्रहरु सञ्चालन गर्ने उद्घोष गर्नुभयो ।

सीमित स्रोतसाधन, पूर्वाधार र जनशक्तिबाट स्वास्थ्य क्षेत्रमा अधिक लाभ हासिल गर्न आवश्यक गृहकार्य भइरहेको बताउँदै उहाँले भक्तपुरस्थित अंग प्रत्यारोपण केन्द्र साँघुरो भएकोले उपयुक्त ठाउँमा स्थानान्तरणको लागि आवश्यक पहल भइरहेको बताउनुभयो ।

बाँकी पेज ७ मा

## थारू भाषाका कवितामा महिला हस्ताक्षरको परिचर्चा

काठमाडौं । 'हमार संस्कृत्ति हमार स्वाभिमान, सक्कुजे मिल्के बचाई आपन बचाई आपन पहिचानु भन्ने मूल नाराका साथ २०६९ साल माघदेखि सुरु भएको थारू साहित्य रचना वाचनको शृङ्खला ठुम्रार साहित्यिक बखेरीको १००औं भाग शताङ्कसम्म आइपुगेको छ ।

यस अवसरमा नेपाल प्रज्ञा प्रतिष्ठान र थारू लेखक सङ्घ नेपालको सहकार्यमा ठुम्रार साहित्यिक बखेरीको १०० औं शृङ्खलाको विमर्श गरिएको थियो । कार्यक्रममा थारूभाषा र साहित्यका युवाअध्येता भूमिका थारूले थारूभाषाका कवितामा महिला हस्ताक्षर विषयक कार्यपत्र प्रस्तुत गर्नुभएको थियो।

प्रज्ञा प्रतिष्ठान देवकोटा सभाकक्षमा आयोजित यस विमर्श कार्यक्रममा बर्दियाली थारू विकास मञ्च, चम्पन सांस्कृतिक समूह, बरघर रेस्टुरेन्ट, राष्ट्रिय थारू कलाकार मञ्च, निसराउ ग्रुप प्रालि, जेनस इन्टरनेसनल प्रालि, अग्रासन थारू महिला समूह, यूनिक थारू ग्रुप र न्यु जर्सी थारू कम्युनिटीलगायतका समाजिक सङ्घ संस्थाहरू समेत सहआयोजकका रूपमा रहेका थिए ।

प्रमुख अतिथि नेपाल प्रज्ञा प्रतिष्ठानका कुलपति भूपाल राईले ब्यानर बाचन गरेर कार्यक्रमको समुद्घाटन गरेको थियो । उनले कार्यक्रमलाई सम्बोधन गर्दै आफ्नो टिमले प्रज्ञा प्रतिष्ठान सम्हालेपछि आदिवासी, जनजाति, भाषाभाषीका भाषालाई प्राथमिकता दिएको बताउँदै भने, 'राष्ट्रिय कविता महोत्सवमा भाषिक रूपले कविहरूको उपस्थिति

बाँकी पेज ७ मा

## पेशासँगै अनुशासित हुनपर्छ–बिजुक्छें

भक्तपुर । नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान विजुक्छें रोहितले पेशासँगै पेशाकर्मी अनुशासित हुनुपर्ने बताएको छ । निओ फ्युजन स्कुल अफ कम्प्युटरले शनिबार आयोजित १९ औ प्रमाणपत्र, प्रशंशापत्र, अभिनन्दन, पुरस्कार वितरण तथा साँस्कृतिक कार्यक्रममा अध्यक्ष बिजुक्छेंले जुनसुकै क्षेत्रका विज्ञ भए पनि पेशासँगै इमान्दारिता, नैतिकता, सदाचार अहिलेको आवश्यकता भएको बताएको हो ।

उनले अनुशासन भएन भने जस्तोसुकै विज्ञताको खास अर्थ नहुने बताउँदैं आजको युवा पुस्तालाई पेशाप्रतिको इमान्दारिता र अनुशासनको महत्व बुझाउनुपर्नेमा जोड दिए । बागमती प्रदेशका सांसद सुरेन्द्रराज गोसाईले आफूले सिकेको सीपमा दक्ष भई स्वदेशमै काम गर्नुपर्नेमा जोड दिए । भक्तपुर नगरपालिकाकी उपप्रमुख रजनी जोशीले नयाँ पुस्तामा मेहनतको महत्वबारे चर्चा गरे ।

कार्यक्रममा निःशुल्क तालिमका प्रशिक्षकहरुलाई पुरस्कार वितरण गरिएको थियो । जस अनुसार हाउस वाइरिङका कृष्णप्रसाद तुईतुई, पत्रकारिताका रेणु त्वानाबासु, मोवाइल ममर्तका दिपेश लागे, व्युटी पार्लरका सनिशा कोजु, धिमे बाजाका उगेन बोयजु, धाँ बाजाका सविन लेवा, नृत्यकलाका लक्ष्मी तामाङ, गितारका सुमिता वनमाला र इन्टिरियल डिजाइनका एन्जिला याकामीलाई सम्मान गरिएको थियो । यसैगरी नेपालको ख्याती प्राप्त पौभा कलाकार सूर्यबहादुर चित्रकार, १५ वर्ष निरन्तर प्रशिक्षक रहेबापत राधा ब्याञ्जु र स्वतन्त्र पत्रकार कृष्ण किसीलाई पनि सम्मान गरिएको थियो ।

निओ फ्युजन संस्था सन् २००६ मा स्थापना भएको हो । संस्थाले स्थापनाकालदेखि नै विभिन्न विषयहरुमा युवाहरुलाई

बाँकी पेज ७ मा

## अव्यवस्थित प्लटिङ्गले भक्तपुर डुबान



भक्तपुर । मनसुनको समय चलिरहेको छ जसको कारण भक्तपुर डुबानको समस्या पनि बल्झिएको छ । ठुलो वर्षा हुनासाथ भक्तपुर हुँदै बहने नदीहरुले आसपासका क्षेत्रलाई नियमित जसो डुबाउने गरेका छन् भने दुईदिन लगातार वर्षा हुँदा अन्य क्षेत्रमा पनि पानी पस्ने गरेको छ ।

भक्तपुरमा ४ राजनीतिक दलका जिल्ला अध्यक्षहरुले भने भक्तपुर डुबानको मूल जड अव्यवस्थित प्लटिङ्ग भएको बताएका छन् । नेकपा (एमाले) का अध्यक्ष वचन देउजा, नेकपा (माओवादी केन्द्र) का अध्यक्ष सुनिल गोठे 'बासु' त्यसैगरी राष्ट्रिय स्वतन्त्र पार्टीका सभापति रामेश्वर थापा र जनता समाजवादी पार्टीका अध्यक्ष राजाराम ढुकुछुले शनिवार प्रेस सोसाइटी नेपालको अन्तरक्रियामा बोल्दै डुबानको मुख्य दोष अव्यवस्थित प्लटिङ्गलाई दिएका हुन् ।

अव्यवस्थित प्लटिङ्का कारण भू-क्षय भई बगेको माटोले नदीको सतह पुरिएको, जङ्गल मासिदा जमिनले पानी सोस्न नसकेको, नदी मिचिएको र करिडरसमेत बनाउन नसकिएको भन्दै जिल्ला अध्यक्षहरुले सबै तहका सरकार मिलेर समस्या समाधानमा लाग्ने प्रतिवद्धता पनि प्रकट गरे ।

सो अवसरमा एमाले अध्यक्ष वचन देउजाले बाढी पहिरो जस्ता प्राकृतिक विपत्तिको सामना गर्न सबै राजनीतिक दल एकजुट हुनुपर्नेमा जोड दिएका छन् । राजनीति पेशा नभई बिशुद्ध समाजसेवा भएकोले जनताको कुरा आउँदा सबै राजनीतिक दल एक हुनुपर्ने उनको भनाइ छ ।

जिल्लामा नेमकिपाले साथ नदिंदा हनुमन्तेको डुबानबाट बस्तीहरुलाई बचाउन नसकिएको

बाँकी पेज ७ मा

## संसदको थाप्लोमा ३७ विधेयक, ओली सरकारले दिएन बिजनेस

ज्ञानु घिमिरे

काठमाडौं- प्रतिनिधि सभाका विभिन्न समितिमा रहेका १८ विधेयकमध्ये संसदमा एउटा पनि विधेयक नआएपछि प्रतिनिधि सभा सुनसान छ । प्रतिनिधिसभामा बिजनेस नभएको भन्दै पछिल्लो १५ दिनमा २ वटा मात्र संसद् बैठक बस्ने कार्यसूची छ । एउटा प्रतिनिधि सभाको बैठक साउन २१ गते बसेको थियो । अर्को बैठक साउन २९ बस्ने छ ।

बैठकमा, कानुन, न्याय तथा मानवअधिकार समितिबाट सर्वसम्मतिले पारित भएको सङ्क्रमणकालीन न्यायसम्बन्धी टीआरसी विधेयक प्रस्तुत गर्ने दलहरुवीच सहमति भएको छ । कानून न्याय तथा मानवअधिकार समितिकी सभापति विमला सुबेदीले टीआरसी विधेयकमाथिको समितिको प्रतिवेदन प्रतिनिधि सभामा मंगलबार पेस हुने बताइन् ।

कार्य व्यवस्था परामर्श समितिको बैठक बसेर संसद्को पाक्षिक क्यालेन्डर पारित गर्ने र ३० गतेदेखि टीआरसी विधेयकमा छलफल गर्ने कार्यसूची छ । तर ३१ र ३२ गते पनि संसद् बैठक बस्ने कार्यसूची छैन । कांग्रेस-एमाले नेतृत्वको सरकारले संसदलाई पर्याप्त बिजनेस दिन सकेको छैन ।

सभामुख देवराज घिमिरेले सरकारसँग बिजनेस मागेका छन् । उनले प्रधानमन्त्री केपी शर्मा ओलीलाई भेटेरै कुरा राखेका छन् । तर, सरकारले सदनलाई खासै वास्ता गरेको छैन ।

सदनमा बिजनेस नपाएपछि सभामुख देवराज घिमिरेले विभिन्न समिति सभापति, संसदीय दलका प्रमुख नेताहरू, प्रमुख सचेतक र सचेतकसँग २१ गते संसद् सकिएपछि छलफल गरेका थिए । तर नेपाली कांग्रेसको केन्द्रीय समिति बैठक, नेकपा माओवादी केन्द्रको स्थायी समिति बैठक र जसपा नेपालको पनि केन्द्रीय कमिटी बैठक परेको कारण संसद् सुनसान नै भयो । न सांसदहरुले नै

बाँकी पेज २ मा

# सिद्धार्थ सहकारीले मनायो १६ औं स्थापना




भक्तपुर । मध्यपुर थिमिको शंखधर चोकमा रहेको सिद्धार्थ बचत तथा ऋण सहकारी संस्थाले १६ औं स्थापना दिवस मनाएको छ । नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ (नेफ्स्कूनका)का अध्यक्ष चन्द्रप्रसाद ढकालको प्रमुख आतिथ्यतामा १६ औं स्थापना दिवस मनाएको हो ।

अध्यक्ष ढकालले सहकारी मूल्य ,मान्यता र सिद्धान्तमा सञ्चालन भएका संस्थाहरुमा समस्या नआएको बताए । नेफ्स्कून बचत तथा ऋण सहकारीहरुको लागि स्थिरिकरण र स्तरिकरण कार्यक्रम ल्याएको भन्दै उक्त कार्यक्रममा आवद्ध हुने संस्थाहरु दिगोरुपमा सञ्चालन हुने प्रष्ट पारे । कार्यक्रममा बिशेष अतिथिको रूपमा चाणक्य कलेजका अध्यक्ष चन्दनकृष्ण श्रेष्ठ रहेका थिए ।

सचिव सोहन कायस्थले संचालन गरेको संस्थाका संचालक समिति ,लेखा समिति ,विभिन्न समिति, उपसमिति, सदस्यहरुको कार्यक्रममा उपस्थिति रहेको थियो । संस्थाका उपाध्यक्ष इन्द्र कृष्ण श्रेष्ठले स्वागत मन्तव्य राखेको कार्यक्रममा कोषाध्यक्ष हिरामान शखदेवबाट संस्थाको हालसम्मको आर्थिक कारोबारका बारेमा जानकारी दिएका थिए । अध्यक्ष राजेश श्रेष्ठले कार्यक्रम माथि प्रकाश पार्दै संस्थाको विभिन्न गतिविधि र भावी कार्यक्रम सम्बन्धि जानकारीका साथै संस्थाका बचत तथा ऋण योजनाको बारेमा चर्चा गरेका थिए ।

संस्थाको आर्थिक बर्ष २०८०/०८१ उत्कृष्ट बचत कर्तामा बिष्णु लक्ष्मी श्रेष्ठ, उत्कृष्ट ऋणी सदस्यमा लक्ष्मी कार्की, उत्कृष्ट कारोबारी सदस्यमा कृष्ण गोपाल श्रेष्ठ तथा जेष्ठ नागरिकको रूपमा जगतलक्ष्मी कायस्थलाई आगामी १६ औं बार्षिक साधारण सभामा सम्मान गर्ने घोषणा गरिएको छ । संस्थाले साताव्यापी कार्यक्रमको आयोजना गरी १६ औं स्थापना दिवस मनाएको हो । त्यस अवधिमा संस्थाले वित्तीय साक्षरता तथा स्वास्थ्य शिविरको समेत आयोजना गरेको थियो ।

## संसदको.......

प्रतिनिधि सभा बैठकलाई वास्ता गरे, न त सरकारले नै । संसदमा अन्य विषयमा प्रश्नोत्तर कार्यक्रम गर्न सक्ने विधानमा नै व्यवस्था छ तर यतातिर पनि कसैले ध्यान दिएनन् ।

सभामुखले प्रधानमन्त्रीसँग कुरा गरेपछि अब समितिहरूमा रहेका विघेयकलाई छिटो भन्दा छिटो संसद्मा प्रस्तुत हुने वातावरण तयार गर्न समितिलाई निर्देशन दिइएको सभामुखको सचिवालयको दाबी छ ।

नयाँ सरकार आएपछि पुरानो सरकारले प्रस्तुत गरेको विधेयकलाई अगाडि बढाउने कि नबढाउने भन्ने अलमलका कारण पनि प्रधानमन्त्री ओलीले संसदलाई बिजनेस दिन ढिलाइ गरेको कतिपयको बुझाइ छ ।

तर, कांग्रेसका प्रमुख सचेतक श्याम घिमिरेले खबरहबसँग भने, 'सभामुखले बिजनेसबारे छलफल गर्नुभएको हो । तर, सबै पार्टीको बैठक भएकाले हामीले आफ्नो कुरा राखेका थियौं ।अब अन्य विधेयकहरू पनि समितिबाट आउँदैछन् । अब सदन बिजनेसविहीन हुँदैन ।'

'संसदलाई बिजनेस दिने काम सरकारको हो । बिजनेस आएको भए प्रक्रियामा जाने थिए । समितिले पनि सरकार अदलबदल भएर विधेयक दिएन र सदन बिजनेसविहीन भयो ।' संसदका प्रवक्ता गिरीले खबरहबसँग भने, 'अहिले तत्काल सदनलाई बिजनेसको अलि अप्ठ्यारो छ । जटिल विधेयक छिटै सदनमा आउने सम्भावना कम छ । कानून भनेको देशका लागि हो, आज बनाएर भोलि नै संशोधन गर्ने अवस्था नपरोस् भन्ने छ । यसो हुँदा विधेयकहरू तत्काल धेरै आउँदैनन् ।'

प्रवक्ता गिरीका अनुसार बिजनेस कम हुँदा क्यालेन्डर प्रभावित हुने अवस्था छ । उनले भने 'संसद् बिजनेस विहीन हुने अवस्था देखिएको छ । समितिहरू यतिकै एक्टिभ भएर काम गर्नुपर्थ्यो ।'

प्रतिनिधि सभाको थाप्लोमा ३७ विधेयक

संसदका प्रवक्ता एकराम गिरीका अनुसार हाल प्रतिनिधि सभामा ३७ वटा विधेयक थाती छन् । चौथो अधिवेशनमा कुनै पनि विधेयकहरू दर्ता भएका छैनन् । संसदका समितिहरूमा विचाराधीन विधेयक १८ वटा छन् । समितिको प्रतिवेदन पेस भइसकेको विधेयक एउटा छ, जुन टीआरसी विधेयक हो ।

हालसम्म सांसदबाट १४ वटा विधेयक पारित भएका छन् । सरकारले फिर्ता लिएको विधेयक एउटा छ भने दुईवटा विधेयक निष्कृय भएका छन् ।

सरकारले राजनीतिक दल सम्बन्धी विधेयक फिर्ता लिएको छ । सरकारले संसद् नभएका बेला आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व ऐनलाई संशोधन गर्न अध्यादेश जारी गरेको थियो । त्यो अध्यादेशलाई प्रतिस्थापन गर्ने विधेयक आए पनि समय अभावका कारण निष्कृय भएको छ । ६० दिनभित्र विधेयक पारित हुन नसकेका कारण उक्त अध्यादेश निष्कृय भएको प्रवक्ता गिरीले बताए ।

यस्तै, स्वास्थ्यमन्त्री प्रदीप पौडेलले मन्त्री हुनु अगाडि नै गैरसरकारी विधेयक दर्ता गरेका थिए । औषधि तथा स्वास्थ्य सामाग्री नियमन तथा नियन्त्रण विधेयक उनी मन्त्री भएपछि निष्कृय रहेको छ ।

प्रतिनिधि सभामा राष्ट्रिय मर्यादासँग सम्बन्धित विधेयक पनि छ, यो संसदमा रहेको एकमात्र गैरसरकारी विधेयक हो । यो सदनमा पेस भए पनि अगाडि नबढेको सांसदका प्रवक्ता एकराम गिरीले जानकारी दिए।

संसदीय समितिमा रहेका १८ विधेयक

१. गेटा मेडिकल कलेज
२. सहिद दशरथ चन्द्र स्वास्थ्य विश्वविद्यालय विधेयक
३. नेपाल विश्वविद्यालय विधेयक
४. विद्यालय शिक्षा विधेयक
५. सार्वजनिक सेवा प्रसारण विधेयक
६. अख्तियार दुरुपयोग अनुसंधानको तेस्रो संसोधान
७. भ्रष्ट्राचार निवारण विधेयक पहिलो संशोधन
८. केही नेपाल ऐनलाई संशोधन गर्न बनेको विधेयक
९. विद्युत् विधेयक ऊर्जा, जलस्रोत तथा सिँचाइ मन्त्रा
१०. विद्युत् व्यापार विधेयक
११. बैङ्किङ कसुर तथा सजाय विधेयक अर्थ मन्त्रालय
१२. भन्सार विधेयक
१३. निर्माणमुखी सामग्री व्यवस्थापन तथा नियमन विधेयक, २०८०
१४. विधानसम्बन्धी विधेयक
१५. संघीय निजामती सेवा विधेयक
१६. बैङ्क तथा वित्तीय संस्था सम्बन्धी विधेयक
१७. जलसा रेत विधेयक
१८. सुरक्षित कारोबार पहिलो संशोधन विधेयक

चालु अधिवेशनबाट पारित भएका विधेयक

१. अनुगमन तथा मूल्याङकन विधेयक
२. अभिलेख संरक्षण
३. खाद्य स्वच्छता तथा गुणस्तर विधेयक
४. सुरक्षण मुद्रणसम्बन्धी विधेयक
५. आर्थिक विधेयक
६. विनियोजन विधेयक
७. राष्ट्रिय ऋण उठाउने विधेयक
८. भन्सार महसुल विधेयक
९. सम्पत्ति शुद्धीकरण
१०. मुलुकी संहितासम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने विधेयक
११. आर्थिक विधेयक २०८१
१२. लगानी सहजीकरणसँग सम्बन्धित विधेयक २०८१

समितिमा अड्किएका विधेयकलाई छिटो सदनमा ल्याएर छलफल गराउनुपर्ने कुरामा सभामुख चुकेको संसदीय मामिलाका जानकार हरिबहादुर थापा बताउँछन् ।

'सभामुखले पनि समिति सभापतिलाई नै तारन्तार बैठक राखेर विधेयक अगाडि बढाउन प्रेरित गर्नुपर्थ्यो । सरकारसँग सभामुखले काम माग्दै गर्दा तिमीसँग भएको काम किन गरेनौ भनेर सभामुखलाई पनि प्रश्न उठाउने ठाउँ सरकारको हुन्छ' थापाले अगाडि भने, 'संसदमा प्रश्नोत्तर सङ्कल्प प्रस्ताव र ध्यानाकर्षण प्रस्तावको बारेका सभामुखले पनि नयाँ क्रिएशन नगरेको देखिन्छ । तर, सांसदले आफ्नो तर्फबाट बिजनेस दिन सकेन ।'

थापा संसदमा मन्त्रीहरूसँग प्रश्नोत्तर चलाइदिएको भए पनि काम हुने बताउँछन् । सांसदलाई मुलुकले भोग्नुपरेको समस्याका बारेमा प्रस्ताव ल्याउन आह्वान गर्ने अधिकार रहेको उनले बताए । सभामुख आफूले गर्नुपर्ने काममा चुकेका कारण संसद् बिजनेसविहीन भएको थापाको तर्क छ ।

उनले भने, 'हाम्रोमा प्रश्नोत्तर संस्कार नै हरायो । आफूलाई पनि काम उत्पादन गर्ने थलोमा संसद् पनि चुकेको छ । प्रश्नोत्तर शैली हराउनु राम्रो भएन । संसदहरुलाई सक्रिय बनाएर प्रश्न गर्न उत्प्रेरित गर्ने सिस्टम नियमावली र विधानमा छ तर काम मात्र भएन ।'

सांसदहरुलाई बोलाएर बेला-बेला किन प्रश्न गर्नुहुन्न भनेर सोध्ने अधिकार सभामुखलाई छ। यो काम पूर्वसभामुख ओनसरी घर्ती र सुवासचन्द्र नेम्बाङले पनि गर्दै आएको थापाको भनाइ छ ।

सभामुख घिमिरे भने २१ गते दलहरूसँगको छलफलमा प्रश्नोत्तर कार्यक्रमबारे प्रस्ताव राख्दा विभिन्न दलको बैठक परेका कारण नेताहरू अनिच्छुक देखिएको बताए । उनले प्रधानमन्त्री र कानूनमन्त्रीसँग बिजनेसका बारेका पटक-पटक कुराकानी गरेका बताए ।

'मैले ध्यानाकर्षण गराइरहेको थिएँ । प्रश्नोत्तर पनि गरौं भनेको, दलहरूका बैठकका कारण नभ्याउने भनियो,' सभामुख घिमिरेले भने, 'समितिका सभापतिलाई पनि मैले पटक-पटक ध्यानाकर्षण गराइरहेको छु मैले संसदीय गतिविधि निरन्तर होस् भनेर फलोअप गरिरहेको छु ।'

यता कांग्रेस संसदीय दलका नेता घिमिरे पनि सभामुखले प्रश्नोत्तर कार्यक्रमको प्रस्ताव गरे पनि पार्टीका बैठकले गर्दा नभ्याएको बताउँछन् । 'पछिल्लो समय सदनमा सांसदहरुको प्रश्न कम आउने गरेको छ,' दलका नेता घिमिरेले भने, 'प्रविधिले पनि सहज बनायो कि ?'

समयमा कानून नबन्दा संविधान कार्यान्ययनमा कठिनाइ

'संविधान कार्यान्वयन गर्न आवश्यक ऐन छिटो आओस् भन्ने छ,' प्रवक्ता गिरीले भने, 'राष्ट्रिय सभालाई संघीयता कार्यान्वयन गर्नका लागि थप ४८ वटा विधेयक जरुरी छ । यसमा कुन विधेयक कति बेला चाहिन्छ भनेर प्रतिवेदन समेत पेस भएको छ । कानून बनाउनुपर्ने धेरै काम बाँकी छ । तर हामी अलमलमा पनि परिरहेका छौं । सरकार परिवर्तनले पनि असर गरेको छ ।'

संसदीय समितिमा छलफल चलिरहेकाले टीआरसी पछि तत्कालै सार्वजनिक सेवा प्रसारण विधेयक पनि संसदमा आउन सक्ने सचिवालयको भनाइ छ । त्यस्तै, अख्तियार दुरुपयोग अनुसन्धान आयोगसँग सम्बन्धित विधेयक र भ्रष्टाचार निवारण विधेयक पनि चाँडै सदनमा दर्ता हुने अवस्थामा रहेको समितिका सभापतिको भनाइ छ ।

विद्युत विधेयक र विधानसम्बन्धी विधेयक भदौ अन्तिम सम्ममा सदनमा आउन सक्ने प्रव्रक्ता गिरीले बताए । समितिमा विधेयकबारे छलफल हुन समय लाग्ने र १० वटा विषयगत समितिका सदस्य तथा सभापतिहरू पनि प्रतिनिधि सभामा उपस्थित हुनुपर्ने भएकाले कार्यभार पनि बढी भएको गिरीको भनाइ छ । साथै उनले सभापतिलाई दफावार छलफलमा ध्यान दिन सुझाव दिए ।

संसदका १० समितिमध्ये लेखा समितिमा भने कुनै पनि विधेयक जाने प्रावधान छैन ।

खबरहबबाट

# मेड इन नेपाल : नेपाल इको प्यानल

भक्तपुर । नेपालमा इँटा कहिलेदेखि प्रयोगमा आउन थाल्यो ? कसले कसरी माटोको इँटा उत्पादन गर्न थाले ? त्यसको यकिन जानकारी कतै छैन । इतिहास एवं संस्कृतिविद् प्राडा पुरुषोत्तमलोचन श्रेष्ठ करिब दस हजार वर्षअघि सभ्यताको युगसँगै इँटा उत्पादन भएको बताउँछन् । भक्तपुर इँटा उद्योग व्यवसायी संघका अध्यक्ष नातीभाइ हेम्बा पनि धेरै पहिलेदेखि इँटा प्रयोग भइरहेको बताउँछन् । 'उपत्यकाकै प्राचीन सम्पदा चाँगुनारायण मन्दिरमा पाकेको इँटा प्रयोग भएको छ । यसबाट पनि धेरै अघिदेखि इँटा पोल्ने परम्परा रहेको बुझ्न सकिन्छ,' उनले भने ।

ठाडो भट्टा हुँदै जिकज्याक प्रविधिसम्म आइपुग्दा धेरै गुणस्तरीय इँटा उत्पादन हुन थालेको छ यतिखेर । ठाडो भट्टा, केही होफ म्यान क्लिन, चिम्नी, फिक्स जिकज्याक (फोर्सड्राफ्ट) हुँदै नगन्य मात्रामा टनेल क्लिन, सम्म आइपुगेको छ अहिले । 'चिम्नी हुँदासम्म कालो धूवाँ फाल्थ्यो । हाल जिकज्याक प्रविधिमा आईपुग्दा इँटा उद्योग ९० प्रतिशत सुध्रिसकेको छ,' व्यवसायीहरुको दावी छ । भक्तपुर नगरपालिका वडा नं १० महालक्ष्मीका इन्जिनियर कृष्णभक्त दुवालको पुर्ख्यौली पेशा पहिला कृषि र व्यापार अनि पछि इटाभटा नै थियो ४० को दशकदेखि। ख्वप कलेज भक्तपुरमा वातावरण विज्ञानमा माष्टर्स तहमा वातावरण विज्ञान अध्ययापन गराउने उनलाई एकदिन लाग्यो, यसरी परम्परागत रुपमा कहिलेसम्म हाम्रो प्राकृतिक सम्पति माटोको प्रयोग गरी प्रकृतिलाई ध्वस्त गरिरहने ? त्यसपछि उनले थाले अनुसन्धान । यसका लागि उनले थाले देशविदेशको भ्रमण । बहराइनस्थित अलखाजा कम्पनी लिमिटेडसँगको संयुक्त लगानीमा सन् २०१४ देखि उनले थाले इको प्यानलको उत्पादन । भूकम्पले भत्केको घर भूकम्पप्रतिरोधी रुपमा कसरी पुनर्निर्माण गर्ने भनेर सोच गरिरहनुभएको छ भने इको प्यानल नै हो, उनले इको प्यानल भूकम्पप्रतिरोधी भएको भन्दै भने, त्यसो हो भने तपाईंका लागि उचित उपाय हुनसक्छ, प्रिफ्याब अर्थात् इको प्यानलका निर्माण सामाग्रीको प्रयोगबाट बनेको घर ।

के हो नेपाल इको प्यानल ?

नेपाल इको प्यानल स्थायी तथा अस्थायी संरचनामा भित्री तथा वाहिरी पार्टेशन वालको रुपमा प्रयोग हुने आधुनिक निर्माण सामाग्री हो । यो हलुका हुनाले भूकम्प प्रतिरोधी छ । यतिमात्रै होइन यो वातावरणमैत्री पनि छ । वातावरणको कुनै पनि हिसावले क्षति नपुर्याइ यसको निर्माण हुने भएकोले यो वातावरणमैत्री भएको हो । यति मात्रै होइन, यसको विशेषता केलाउँदै जाने हो भने लामो लिष्ट नै बन्छ । यो अग्नीप्रतिरोधी छ अर्थात् यसमा हतपत आगलागी नै हुँदैन । हिमाल, तराई अनि सबैतिर उतिकै उपयोगी छ । यो चिसो ठाउँमा पनि उतिकै उपयोगी छ, अनि गर्मी ठाउँमा पनि । किनकि यसको प्रयोगबाट चिसोमा बाहिरको चिसो भित्र आउँदैन । यसैगरी गर्मी ठाउँमा बाहिरको गर्मी भित्र पस्दैन । यो साउण्ड इन्स्युलेशन पनि छ । अर्थात् यसको प्रयोगबाट भित्रको आवाज वा ध्वनी बाहिर नआउने र बाहिरको आवाज भित्र नआउने हुन्छ । हलुका भएकोले यो दुरदराज जहाँ यातायातको राम्रो सुविधा छैन, त्यहाँ पनि हलुका भएकै कारणले सजिलैसँग पुर्याउन सकिन्छ । यी र ती भन्दा पनि यसको अर्को विशेष विशेषता हो, तीव्र निर्माण सम्पन्न हुनु । कारखानामा पहिला नै बनिराखेर निर्माणस्थलमा जोडे मात्रै पुग्ने भएकाले यसको प्रयोगबाट तीव्र निर्माण सम्भब भएको हो ।

सवैका लागि दुर्भाग्य दुवालका लागि सौभाग्य

२०७२ सालमा नेपालमा महाभूकम्प गयो । सम्पूर्ण नेपालीका लागि यो घटना दुर्भाग्यपूर्ण बन्यो तर इन्जिनियर कृष्णभक्त दुवाल र उनको टोलीलाई सौभाग्य बन्यो । किनकि महाभूकम्पपछि नेपालमा धेरै भौतिक संरचना नष्ट भए । तत्कालका लागि बस्नयोग्य निर्माणस्थल बनाउन अति आवश्यक भयो । त्यसका लागि इको प्यानल एउटै मात्रै विकल्प बन्यो । यसले उनको निर्माण सामाग्री देशभरि नै प्रचारप्रसारमा गयो । तीव्र निर्माण सम्पन्न हुनसक्ने कारणले नै धेरै भूकम्पबाट नष्ट भौतिक संरचना उनकै इको प्यानलको प्रयोगबाट चाँडै ठडिन सफल भयो । उनको उत्पादन देशैभरि सवैतिर पुग्यो ।

इटा भन्दा ६ गुणा हलुका

गाह्रो बनाउँदा ईंटाको बिकल्पमा इको प्यानलको प्रयोगबाट घर थप भूकम्पप्रतिरोधी हुने सीईओ दुवालको भनाइ छ । उनका अनुसार ईंटा भन्दा इको प्यालनको वाल ६ गुणा हलुका हुने हुन्छ । यही कारण कम भार परेर थप मजबुत हुने भएको उनको भनाई हो । 'भूकम्पले क्षति नपुगेको घरधनीले तल्ला थप गर्दा ईंटाको ठाउँमा इको प्यानलको प्रयोग गरिरहेका छन्' सीईओ दुवालले भने, 'तल्ला थप गर्नेले मात्रै होइन, नयाँ निर्माण गर्ने अधिकांशले ईंटाको विकल्पमा इको प्यानलको माग गरिरहेका छन् ।' स्थायी तथा अस्थायी भौतिक संरचनाको भित्री पार्टेशन वाल (गाह्रो) तथा बाहिरी वाल बनाउनका लागि इको प्यानल प्रयोग गर्न सकिन्छ । यसका उत्पादन अस्थायी निर्माणमा मात्रै नभई स्थायी आवासीय घर तथा मल्टिकम्प्लेक्समा पनि प्रयोग गर्न सकिन्छ । अस्थायीका साथसाथै ठूला-ठूला अपार्टमेन्ट हाउजिंगमा पनि इको प्यानलको प्रयोग हुँदै आएका छन् । यसको जोडाइमा कुनै पनि च्यानलको प्रयोग हुँदैन । इको प्यानलमा भएको टङ्ग एण्ड ग्रुभ ज्वाइन्ट र यसमा प्रयोग हुने विशेष प्रकारको एडिसिभ सिमेन्टले यसको जडान मजबुत हुन्छ । यसमा सजिलै विद्युतीय उपकरण जडान गर्न कन्सिल वायरिंग तथा बाथरुमको टायलहरु जडान गर्न सकिने छ । हालसम्म काठमाडौं, भक्तपुर, ललितपुरलगायत उपत्यका र उपत्यका बाहिरका झापा,धरान,उदयपुर, इटहरी, चितवन, पोखरा, नेपालगन्जमा यसका डिलर्सहरु रहेका छन् । डिलरहरु बढ्ने क्रम जारी रहेको कम्पनीले जनाएको छ । यही डिलरहरुबाट यसका उत्पादनहरु देशैभरि पुगिरहेका छन् । उनका अनुसार यो अरु परम्परागत गाह्रो भन्दा १५ देखि २० प्रतिशतसम्म सस्तो पनि छ । भारतलगायत अन्य मुलुकबाट आयातित प्रिफ्याबभन्दा नेपाल इको प्यानल गुणस्तरयुक्त र मजबुत रहेको कम्पनीको दावी छ । सुरुमा ५० प्रतिशत कच्चा पदार्थ बाहिरी मुलुकबाट आयात गरी उत्पादन थालेको थियो । पछि कम्पनीले देशका विभिन्न इन्जिनियरिङ्ग क्याम्पसहरूसँगको सह-रिसर्चमा क्यालसियम सिलिकेट बोर्डको प्रयोग बिनै १० प्रतिशतमात्रै आयातित कच्चा पदार्थ प्रयोग गरी इको प्यानल बनाउन सफल भएको जनाइएको छ । प्रिफ्याब भन्नेवितिकै कमसल तथा अस्थायी संरचनामा मात्रै हो भन्ने आम मानिसको भ्रमलाई चिर्दै नेपाल इको प्यानलको प्रयोग देशको बिभिन्न भागमा आवासयी घर, व्यापारिक भबन, मल्टिकम्प्लेक्स, हस्पिटललगायतमा प्रयोग हुँदै आएको कम्पनीको दावी छ । यसको स्याण्डर्ड साइज ८ लम्वाइ र २ फिट चौंडाइको हुन्छ । मोटाइको हकमा ५० मिलिमिटर, ७५ मिलिमिटर, ९० मिलिमिटर, १२० मिलिमिटर, १५० मिलिमिटर र १८० मिलिमिटरसम्मको हुन्छ । लम्बाईको हकमा ग्राहकको आवश्यकताअनुसार लामो छोटो पनि बनाउन सकिन्छ । नेपाल इको प्यानल ४.५ मिलीमिटरको नन् एस्वेस्टस् क्याल्सियम सिल्केट बोर्ड दुई साइडमा र भित्र सिमेन्ट, बालुवा, इपीएस (चलनचल्तीको भाषामा थर्मोकोल) को मिश्रणबाट बनेको हुन्छ । यसको कर्पोरेट अफिस भक्तपुरको सल्लाघारी स्थित च्वङ गणेशमा रहेको छ । यसको कारखाना पनि जिल्लाकै चाँगुनारायण नगरपालिका झौखेलमा रहेको छ । भक्तपुरबाट बाहिर जाने सामानमध्ये इको प्यानल रहेको छ । सन् २०१४ मा इन्जिनियर कृष्णभक्त दुवालले सुरु गरेको इको प्यानल आज देशैभरि पुगेको छ । स्थायी तथा अस्थायी संरचनाको निर्माणमा भित्री तथा वाहिरी पार्टेशन वालको रुपमा प्रयोग हुने नयाँ निर्माण सामाग्री नै इको प्यानल हलुका, भूकम्पप्रतिरोधीलगायतका कारण पछिल्ला वर्षमा यसको लोकप्रियता निरन्तर बढ्दो छ । इन्जिनियर कृष्णभक्त दुवाल वातावरणमैत्री अनि ऊर्जा किफायती भएको कारण पनि जनताले इको प्यानललाई मन पराएको सुनाउँछन् । नेपालमा मात्रै होइन, अहिले संसारभर नै वातावरण प्रदूषण ठूलो समस्यको रूपमा आइरहेको छ,' उनले भने, 'त्यही कारण मानिसले वातावण विनाश नपुऱ्याउने निर्माण सामाग्री मन पराइरहेका छन् । इको प्यानल ऊर्जा किफायती पनि छ । यसको उत्पादनमा ऊर्जाको बचत हुन्छ । अन्य अनेक विशेषताका साथै वातावरणमैत्री र ऊर्जा किफायती भएकै कारण पनि धेरै जनताले यसलाई रुचाइएको उनको दाबी हो ।

# राणाकालीन विद्यालयको अवस्था नाजुक




भक्तपुर । भक्तपुरकै पहिलो विद्यालयको हालको अवस्था देख्दा आफूलाई निकै दुःख लागेको बागमती प्रदेशकी सामाजिक विकास मन्त्री हरिप्रभा खड्गीले बताएको छ । विद्यालयको अवलोकन गर्दै उनले विद्यालयको हालको अवस्था देख्दा आफूलाई निकै दुःख लागेको बताएको हुन् । सय वर्ष पुरा भएको विद्यालयलाई स्थानीय निकाय देखि प्रदेश केन्द्रले समेत उपेक्षा गर्दा इतिहास लोप हुने अवस्थामा पुगेको देख्दा आफूलाई ज्यादै दुःख लागेको बताइन् ।

उनले भूकम्प देखि हाल सम्म विद्यालयले शैक्षिक तथा भौतिक पूर्वाधारका विषयमा विद्यालयले चालेको कदमको विषयमा जानकारी लिएको थियो । यस्तै विद्यालयका प्रधानाध्यापक राम हाडाले नमुना विद्यालयको रूपमा विद्यालय छनोट भएको भए पनि स्थानीय निकायको असहयोगका कारण विद्यालय भवन बन्न नसकेको र टहरामा नै अध्यापन गराउन बाध्य भएको जानकारी दिए । विद्यालय दरबार क्षेत्र भित्र पर्ने भएका कारण पुरातत्त्व र स्थानीय निकायको चेपुवामा पर्दा विद्यालयको भौतिक पूर्वाधार निर्माणमा ढिलाइ हुँदै आएको सरोकारवालाहरूले बताएका थिए । विद्यालय अनुगमन पश्चात मन्त्री खड्गीले विद्यालय निर्माणका लागि प्रदेशबाट सक्दो पहल गर्ने प्रतिबद्धता व्यक्त गरे । उनले शिक्षा क्षेत्रको विकासलाई प्रदेश सरकारले प्राथमिकताका साथ अघि बढाएको र शिक्षाको गुणस्तर सुधार तथा विद्यार्थीहरूलाई प्रोत्साहन गर्ने उद्देश्यले निरीक्षणमा आएको बताए । सामुदायिक विद्यालयको स्तर सुधार गर्ने र नतिजामुखी शिक्षण सिकाइको अवधारणा अनुसार काम गर्ने निर्देशन मन्त्री खड्गीले दिएकी छिन् ।

निजी विद्यालयको तुलनामा सामुदायिक विद्यालयको नतिजा खस्कनुको कारणसहित गुणस्तर सुधारका लागि योजना निर्माण गरेर मन्त्रालयमा पेस गर्न उनले विद्यालयहरूलाई निर्देशन दिएको थियो । प्रदेश सरकार शिक्षाको विकास र विद्यार्थीहरूको भविष्य प्रति गम्भीर भएर अघि बढेको उनको भनाई छ । अनुगमनका क्रममा विद्यालयका प्रधानाध्यापक, शिक्षकहरूको क्षमता विकास, तालिम तथा प्रविधिको प्रयोग तथा सुविधायुक्त ल्याब र भौतिक संरचना निर्माण गर्नुपर्ने आवश्यकता रहेकाले सरकारले त्यसतर्फ ध्यान दिनुपर्ने जानकारी दिएका थिए ।

अनुगमन टोलीमा प्रदेशसभा सदस्य सुरेश श्रेष्ठ, शिक्षा निर्देशनालय बागमती प्रदेशका महानिर्देशक दीपेन्द्र सुवेदी लगायतको सहभागिता रहेको थियो ।

भक्तपुरमा राणाकालीन अवस्थामा ठुलो संर्घषका बाबजुद विसं १९८१ श्री पद्म माध्यमिक विद्यालय खुलेको थियो । शिक्षा विकासलाई मध्यनजर गर्दै खुलेको यो विद्यालय भक्तपुरको नै पहिलो विद्यालय हो । श्री पद्मको स्थापना चन्द्रशमशेरको पालामा ‘ भादगाउँ अङ्गेजी विद्यालय’ का नामले शुरु भएको थियो । समाजसेवी जगबहादुर अमात्य र पण्डित शिवप्रसाद मिश्रले दुई कक्षासम्म सञ्चालन गरेका थिए । प्रारम्भिक चरणमै अङ्गेजी शिक्षा भित्र्याउने यो भक्तपुरकै पहिलो स्कुल थियो । विसं २००३ सालमा पद्म शमशेरले यसलाई माध्यमिक तह बनाउने हुकुम दिएसँगै यसको नाम पनि फेरियो । यहाँका विद्यार्थी २००३ सालबाटै एसएलसी परीक्षामा सहभागी थिए । त्यो बेला ४ जना विद्यार्थीले परीक्षा दिएका थिए ।

राणाकाल देखि विभिन्न समस्या झेल्दै भक्तपुरको शैक्षिक गुणस्तरलाई ध्यान दिँदै आएको उक्त विद्यालय हाल टहरामा अध्यापन गराउन बाध्य भएको छ । भक्तपुर नगरपालिकाको उपेक्षाका कारण उक्त विद्यालय हाल दयनीय अवस्थामा पुगेको हो । शिक्षाको क्षेत्रमा आफूले ठुलो काम गरेको भन्दै हिँड्ने नेपाल मजदुर किसान पार्टीको १०० प्रतिशत जनप्रतिनिधि भएको उक्त नगरपालिकाको उपेक्षामा श्री पद्म र २००४ सालमा स्थापना भएको विद्यार्थी निकेतन माध्यमिक विद्यालयको अवस्था दयनीय भएको हो ।

संसद्मा शिक्षा क्षेत्रमा आफूहरूले गरेको योगदानको ठुलो चर्चा गर्ने प्रेम सुवालको घर भन्दा १०० मिटरको दुरीमा रहेका यी दुई विद्यालयलाई भने पुनःनिर्माण सम्म गर्न नदिँदा विद्यार्थी पुरानो र जोखिम पूर्ण भवनमा नै अध्ययन गर्न बाध्य हुँदै आएका छन् ।

आफ्नो विश्वविद्यालय माग गर्दै प्रतिनिधिसभा र प्रदेश सभाका संसद्मा चर्को भाषण गर्ने नेपाल मजदुर किसान पार्टीका नेताहरूले स्थानीयतह देखि नै भक्तपुरका पहिला विद्यालयका रूपमा रहेका यी विद्यालयको अस्तित्व भने मेटाउन लागि परेका छन् । भक्तपुर नगरपालिकाले दुवै विद्यालयको नक्सा पास सम्म नगर्ने विद्यालयको भौतिक अवस्थाको विषयमा चासो नदिने र कसैले भवन बनाई दिने भनी पैसा दिए पनि भवन बनाउन नदिने जस्ता कार्य गर्दै आएको छ । तर ख्वप कलेज र विद्यालय निर्माणका लागि भने प्रदेश देखि स्थानीय तह सम्मको ढोका ढकढकाउँदै रकम ल्याउन गरेको आरोप छ ।

# देशका ३४ स्थानीय जनप्रतिनिधिको पद रिक्त

काठमाडौं । प्रधानमन्त्री केपी शर्मा ओली र निर्वाचन आयोगका प्रमुख आयुक्त दिनेशकुमार थपलियासहित आयुक्तहरूसँग स्थानीय तहमा रिक्त पदमा उपनिर्वाचनको तयारीबारे छलफल भएको छ ।

सिंहदरबारस्थित प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयमा भएको छलफलमा आयोगले कीर्तिपुर नगरपालिकाका प्रमुखसहित ३४ रिक्त पदमा आगामी मंसिर तेस्रो साता निर्वाचन गर्न उपयुक्त हुने सुझाव दिएको छ ।

प्रधानमन्त्री ओलीले जाडोअगावै निर्वाचन मिति तय गर्न र निर्वाचनमा मितव्ययीता अपनाउन आग्रह गरेका छन् ।

मिति घोषणाअघि आयोगले सम्बन्धित तहमा मतदाता नामावली अद्यावधिकका लागि आव्हान गर्ने जानकारी गराएको छ ।

छलफलमा प्रधानमन्त्रीका मुख्य सल्लाहकार विष्णुप्रसाद रिमाल र मुख्यसचिव लीलादेवी गड्तौलालगायत सहभागी थिए ।

निर्वाचन आयोगकाअनुसार कीर्तिपुरमा नगरपालिका प्रमुख रिक्त छ । कीर्तिपुर नगरपालिकाका प्रमुख राजकुमार नकर्मीको ११ साउनमा निधन भएको हो । मिर्गौला रोगबाट पीडित नकर्मीको वीर अस्पतालमा उपचारका क्रममा निधन भएको थियो ।

उता २०८० कात्तिक १७ को भूकम्पका कारण जाजरकोटको नलगाड नगरपालिकाकी उपप्रमुखसहित ७० जना भन्दाबढीको मृत्यु भएको थियो । भूकम्पमा परेर नलगाड नगरपालिकाकी उपप्रमुख सरिता सिंहको मृत्यु भएपछि उक्त स्थान रिक्त छ ।

आयोगका अनुसार गाउँपालिका अध्यक्ष दुईजना, उपाध्यक्ष दुई जना र वडाध्यक्ष २८ जनाको पद रिक्त छ । जनप्रतिनिधि नभएपछि पालिकाको सेवामै समस्या भइरहेको छ ।

त्यहाँका गाउँपालिका अध्यक्ष ७५ वर्षीय लक्ष्मण गुरुङको २०७९ माघ २७ गते हृदयाघातबाट निधन भएको थियो । ७५ वर्षीय गुरुङ कर्णाली प्रदेशका पालिका प्रमुखमध्ये ज्येष्ठ सदस्य थिए । अध्यक्ष गुरुङको निधनपछि अहिले पालिका कार्यवाहक अध्यक्षका रूपमा उपाध्यक्ष मञ्जु कुमारी शर्मा (पाण्डे) ले चलाइरहेकी छन् ।

संविधानमा स्थानीय तहका जनप्रतिनिधिको पद रिक्त हुने अवस्था राजीनामा, मृत्यु वा पदावधि सकिएमा मात्रै हुने व्यवस्था छ ।

संविधानको धारा २१६ को उपधारा ८ मा स्थानीय तहका प्रमुख, उपप्रमुख, वडाध्यक्ष र सदस्यहरूको पद निजले राजीनामा दिए, मृत्यु भए वा पदावधि सकिए रिक्त हुने भनिएको छ ।

राजनीतिक दलसम्बन्धी ऐन २०७३ ले भने संघीय संसद, प्रदेशसभा र स्थानीय तहमा निर्वाचित प्रतिनिधिले निर्वाचित भएको दल त्याग गरेमा स्वतः पद रिक्त हुने भनेको छ ।

ऐनको दफा ३१ मा भनिएको छ, ‘कुनै दलको तर्फबाट उम्मेदवार भई निर्वाचित भएको सङ्घीय संसदको सदस्य, प्रदेशसभाको सदस्य वा स्थानीय तहको सदस्यले त्यस्तो पदको पदावधि कायम रहेसम्म जुन दलको उम्मेदवार भई निर्वाचित भएको हो त्यस्तो दल त्याग गर्न सक्ने छैन । ‘ कुनै सदस्यले दल त्याग गरेमा निज निर्वाचित भएको पद निजले दल त्यागेको मितिदेखि स्वतः रिक्त भएको मानिनेछ ।’

त्यस्तै स्थानीय तह निर्वाचन ऐन २०७३ मा निर्वाचनका बेला जुन दलको चुनाव चिह्न लिएर उम्मेदवार भएको हो, सम्बन्धित दलले कारबाही गरे पद रिक्त हुने भनिएको छ ।

दफा २६ को उपदफा ४ मा भनिएको छ, ‘उम्मेदवारलाई निर्वाचन चिह्न प्रदान गरिसकेपछि त्यस्तो उम्मेदवारले आफ्नो दल त्याग गरे वा अर्को दलमा प्रवेश गरे उक्त निर्वाचन चिन्ह परिवर्तन हुन सक्ने छैन । त्यस्तो उम्मेदवार निर्वाचित भएमा सम्बन्धित दलले प्रमाणसहित आयोगमा उजुरी दिए निजको सदस्यता खारेज हुनेछ ।’








# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

– प्रेमचन्द

## सम्पादकीय

### “नीतिगत निर्णय” भ्रष्टाचार गर्ने लाइसेन्स नबनोस् !

देशमा भ्रष्टाचार बढ्दै गएको आंकलन आम जनमानसले गरिरहेको छ । यसमा राजनीतिक दलका नेताहरुमा पनि देशमा भ्रष्टाचार मौलाउँदै गएको प्रति बेलाबखत आफू प्रतिपक्षमा भएको समयमा जोडदार रुपमा उठाउने गरेको छ, भलै सत्तामा रहँदा मौन रहने गरेपनि । यसरी देशमा भ्रष्टाचार मौलाउँदै गएको प्रति सबैको चासो रहेको देखिन्छ । आम जनता यस प्रति चिन्तित छन् भने राजनीतिक दलका नेता कार्यकर्ताहरु आम जनमानसको सहानुभूति बटुल्न पनि भ्रष्टाचार न्यून हुनु पर्ने आवाज उठाई रहेको बर्तमान सन्दर्भमा भ्रष्टाचार निवारण ऐनको प्रस्तावित संशोधनमा प्रतिनिधि सभाको राज्य व्यवस्था तथा सुशासन समितिको छलफल ‘हदम्याद’का विषयमा केन्द्रित भएको छ ।

छलफलमा भ्रष्टाचारको कसुरमा थाहा पाएको मितिले ५ वर्षभित्र मुद्दा चलाउनुपर्ने प्रस्तावित प्रावधानको धेरै सांसदहरूले विरोध गरेका छन् ।

सरकारले ‘भ्रष्टाचार निवारण ऐन, २०५९’लाई संशोधन गर्न बनेको विधेयक २०७६ सालमा राष्ट्रिय सभामा दर्ता गराएको थियो । राष्ट्रिय सभामा त्यसलाई पारित गर्न ३ वर्ष लाग्यो । अहिले पनि संशोधन विधेयक प्रतिनिधि सभामा छलफलका क्रममा नै रहेको छ ।

भ्रष्टाचारको सम्बन्धमा माथि भनिए झैं नेपालको संसद् र समाजमा पनि अनौपचारिक रुपमा मात्रै बहस हुनेगरेको छ । सञ्चार माध्यम र सामाजिक सञ्जालमा त समाजकै विचार प्रतिविम्बित नै हुने हो । यसैले नेपाली समाजमा भ्रष्टाचारका सम्बन्धमा बनेका धारणा र कानुन यसरी प्रभावहीन भएका हुन् ।

पक्कै पनि भ्रष्टाचारको विषय निकै जटिल हुनाले हदम्याद तोक्दा कसुरदार उम्कने जोखिम धेरै हुन्छ । छोराले लुटेरै सम्पत्ति कमाए पनि त्यसलाई पौरख ठान्ने आमाबाबु भएको समाजमा मुद्दा नचल्ने बनाउनुको अर्थ राज्यले भ्रष्टाचारबाट लुटलाई वैधता दिनुसरह नै हो ।

हदम्यादै नराख्ने वा प्रस्तावित ५ वर्षको अवधि बढाउने विषयमा सांसदहरूबीच विवाद भए पनि त्यस बुँदामा संशोधन हुनुपर्ने विषयमा लगभग सहमति देखिन्छ । विधेयकमा प्रस्तावित ५ वर्षे हदम्याद कायम राख्नै पर्ने पक्षमा त प्रस्ताव गर्ने दल नेकपा (एमाले)कै सांसदहरू देखिएका छैनन् । यसैले संशोधनमा हदम्यादको अवधि थपिने वा म्याद नै नरहने सम्भावना नै बलियो छ ।

नेपालमा भ्रष्टाचार नियन्त्रण गर्ने हो भने राजनीतिक संस्कृति र सामाजिक मान्यतामै परिवर्तन हुनुपर्छ तर त्यो कानुन बनाएर गर्न सकिँदैन । यसका लागि सामाजिक आन्दोलनकै जरुरी हुन्छ । सुब्बा खर्दारले काम छिटो गरिदिएबापत लिने पैसाले देश नै कङ्गाल हुनेगरी भ्रष्टाचार बढ्ने होइन । संसारमा कुनै मुलुक पनि भ्रष्टाचार मुक्त छैन । नेपाल पनि त्यसको अपवाद बन्न सक्तैन ।

तर यहाँ देशको शासनसत्तामा बस्ने र प्रशासनिक क्षेत्रमा रहेका उच्च पदस्थहरुको नियत सफा भए राज्यलाई नै खोक्रो बनाउनेगरी गरिने ठूला भ्रष्टाचार नियन्त्रणमा आउन सक्छ । तर, प्रस्तावित संशोधनमा भने ‘नीतिगत निर्णय’का नाममा हुने ठूला भ्रष्टाचारलाई जोगाउने नियत लुकेको देखिन्छ ।

यसैले राज्यमा रहेका नागरिक, नेता, कार्यकर्ता र सबै तह तप्काहरु देशबाट भ्रष्टाचार ीयन्त्रण गर्न चाहन्छ । जुन अहिले बोलीमा मात्र सीमित बनेको छ । यहाँ नीतिगत निर्णयको व्याख्या गरिने गरिन्छ । तर कुनै पनि निर्णयमा कैफियत भए कसुरदार उम्कन नसक्ने प्रावधान राखेर कानुनमा संशोधन गर्नु पर्ने आवश्यकका बारेका कसैको ध्यान पुगेको भने देखिएको छैन । यसरी एकातर्फ हदम्यादको विषय उचालेर आम जनमानसको सहानुभूति लिने र अर्को तर्फ हदम्याद विना नै वा केही थपिएर विधयेक पारित गर्ने रणनीति पनि राज्यमा बस्नेहरुको हुन सक्दछ । किनकी भ्रष्टाचार गरिने भनेको नै राज्य संयन्त्रबाट आम जनतामा गरिने लुटतन्त्र हो । यसमा पिडीत बन्ने आम जनता नै हुन । यस विषयमा सबै सजग हुनु आवश्यक छ । यही “नीतिगत निर्णय” भ्रष्टाचार गर्ने लाइसेन्स नबनोस् !

# प्रत्यक्ष निर्वाचित राष्ट्रपति र पूर्ण समानुपातिक निर्वाचन प्रणाली किन ?

● मिङमाडण्डु शेर्पा

कुनै पनि राष्ट्रलाई सुशासन, सामाजिक न्यायसहित समृद्धिको दिशातर्फ उन्मुख गराउने हो भने स्थिर सरकार अनिवार्य आवश्यकता हो । तर, स्थिर सरकार निर्माण कसरी हुन्छ ? स्थिर सरकार बनाउन मौजुदा संविधानमा कुन मुद्दा संशोधन गर्दा उपयुक्त हुन्छ वा स्थिरताको बाधक के हो ? भन्ने विषयको पहिचान हुन आवश्यक छ ।

नेपालको राजनीतिक इतिहासमा २०४६ सालको जनआन्दोलन पछि आजका दिनसम्म करिब तीन दर्जन सरकार बनेका छन् । २०४६ देखि २०६३ सम्म एउटा परिस्थिति र प्रक्रियामा सरकार गठन पुनर्गठन भए । त्यसपछि संविधानसभा हुँदै संविधान जारी भए पश्चात् आजसम्म आइपुग्दा अर्को परिस्थिति र प्रक्रियामा सरकार गठन तथा पुनर्गठन भइरहेका छन् । प्रक्रिया फेरिए पनि सरकार बदलीको रफ्तार बदलिएको छैन । त्यसैले अब बुझ्नै पर्ने भएको छ कि स्थिर सरकार किन र कसरी बन्न सकेनन् ? इतिहासमा बनेका सरकारहरू कस्ता थिए र किन टिक्न सकेनन् ? यो बुझ्नु पनि आवश्यक छ ।

देशको शासकीय स्वरूपमा जनताद्वारा प्रत्यक्ष निर्वाचित कार्यकारी राष्ट्रपतीय प्रणाली, पूर्ण समानुपातिक निर्वाचन प्रणाली र प्रदेशका मुख्यमन्त्रीहरू पनि प्रदेश भरिका मतदाताबाट प्रत्यक्ष निर्वाचित हुने व्यवस्था अभ्यासमा नल्याएसम्म सत्ता अस्थिरता हट्ने देखिँदैन । त्यसैले अब संविधान संशोधनमार्फत तत्काल माथि उल्लेखित व्यवस्था आवश्यक छ । दुई प्रमुख दलले सत्ता साझेदारीका लागि गरेको सहमतिमा संविधान संशोधनको पनि विषय समेटिएको छ । के उनीहरू यस विषयमा संविधान संशोधन गर्न तयार छन् ?

स्मरण होस्, तत्कालीन एकीकृत नेकपा माओवादीले २०७२ असारमा संविधान मस्यौदा समितिमा देशको शासकीय स्वरूपमा प्रत्यक्ष निर्वाचित कार्यकारी राष्ट्रपति हुनुपर्ने सहित १२ बुँदे फरक मत पेस गरेको थियो । संविधानसभाबाट २०७२ असोज ३ मा संविधान जारी भयो । त्यस समयमा तत्कालीन एकीकृत नेकपा माओवादी पार्टी प्रमुख प्रतिपक्षी दलको हैसियतमा थियो । त्यस बेला मुख्यतः नेपाली कांग्रेस र नेकपा एमाले मान्न तयार नभए पछि अन्ततः एकीकृत माओवादीले फरक मतका बाबजुद संविधानमा हस्ताक्षर गर्‍यो । संविधानसभाबाट २०७२ असोज ३ गते नेपालमा संविधान जारी भयो । यस संविधानले देशको शासकीय स्वरूपमा आलङ्कारिक राष्ट्रपति र कार्यकारी प्रधानमन्त्री हुने व्यवस्था गर्‍यो ।

समावेशिता र सङ्घीयता हटाएर राजनीतिक स्थिरता सम्भव छ ?

वर्तमान संविधानको भाग १ को धारा ४ मा नेपाल स्वतन्त्र, अविभाज्य, सार्वभौम सत्ता सम्पन्न, धर्मनिरपेक्ष, समावेशी, लोकतन्त्रात्मक समाजवाद उन्मुख सङ्घीय लोकतान्त्रिक, गणतन्त्रात्मक राज्य हो भनी लेखिएको छ । संविधानले नेपाललाई धर्मनिरपेक्ष राष्ट्रका रूपमा स्थापित गरेको छ । यस संविधानमा नेपालमा बोलिने सबै मातृभाषा राष्ट्रभाषा हुने छ, भनी स्पष्ट पारिएको छ । समानुपातिक समावेशिता, पहिचान र प्रतिनिधित्वको आधार नै सङ्घीयता हो । यि सबै पक्षले स्थायित्वको बाटो देखाएको छ । तर, सत्ताको लागि जे पनि कुकर्म गर्न तयार हुने व्यवहार, चरित्र र मानसिकता नै राजनीतिक अस्थिरताको मूल कारण बनिरहेको छ ।

प्रत्यक्ष निर्वाचित राष्ट्रपति प्रणाली किन ?

२०४६ साल पछाडिका ३५ वर्षको अवधिमा २९ वटा सरकार परिवर्तन भए । सत्ता प्राप्तिका लागि बहुमतको गठबन्धन बनाउने, समीकरण र बहुमतका निम्ति जस्तोसुकै माग र त्यसको सम्बोधन गर्न तयार हुने राजनीतिक प्रवृत्ति नेपाली राजनीतिक वृत्तमा स्वाभाविक खेल बनेको छ । चाहे प्रजातान्त्रिक दल होस्, चाहे कम्युनिस्ट पार्टी वा पञ्चायती दल नै किन नहुन्, सबैको साझा उद्देश्य सत्ता केन्द्रित छ । प्रजातन्त्र उदयपछि कहिले अस्वच्छ छविका नाममा संसद् विघटन गराई त कहिले के नाममा संसद् पुनःस्थापना गराई नयाँ नेतृत्वको सत्तारोहण गराइएको राजनीतिक प्रयास पनि देखिन्छ ।

वर्तमान संसदीय प्रणालीले राजनीतिक दलहरूलाई देशको सामाजिक तथा आर्थिक विकासभन्दा पनि बारम्बार सरकार परिवर्तन र आफ्नो उपस्थितिका निम्ति गणितीय समीकरणमा बढी ध्यान दिन बाध्य तुल्याएको छ । नेपालमा विद्यमान संसदीय प्रणालीको आयाम भनेकै छुट्टाछुट्टै समयमा सरकार परिवर्तन भएर राजनीतिक अस्थिरता सिर्जना हुनु हो । जसका कारण देशले सामाजिक र आर्थिक विकासमा अपेक्षित विकासको गति लिन सकेको छैन । २०४७ यता हालसम्म नेपालमा २९ सरकार बनेका छन् । त्यसमा पनि पहिलो संविधानसभापछि नै १४ वटा सरकार बनेका छन् ।

सत्ता समीकरण र गठबन्धन बनाउने नाममा र गणितीय सङ्ख्या पुर्‍याउने संसदीय खेलले देशभरबाट एक सिट ल्याएका दलले समेत बार्गेनिङ गरी मन्त्रालय चलाएको सत्य हाम्रोसामु छ । त्यस्तै ठुला दलहरूलाई पनि संसद्मा बहुमत पुर्‍याउनका निम्ति स-साना दलसँग समीकरण गर्नुपर्ने हुन्छ । जसबाट असामान्य सम्झौता तथा नाजायज मागहरू पूरा गर्ने र गठबन्धनकै अनुकूलता र प्रतिकूलतामा सरकारको भविष्य निर्धारण हुने हुँदा सरकारको नेतृत्व गरेका प्रधानमन्त्री जनतामुखीभन्दा पनि संसद्मुखी हुन्छन् ।

यस्तो राज्यसत्ताको स्वार्थका कारण जनअपेक्षित विकासका चाहनाहरू ओझेलमा परेका छन्।

अर्कोतर्फ, जनताको मतलाई राजनीतिक दलहरूले सरकार बनाउने र गिराउने खेलमा प्रयोग गरेका छन्। बहुमत पुर्‍याउने नाममा जनताको मतलाई सांसदले करोडौंमा बेच्ने गरेका छन् । एक पटक जनताबाट निर्वाचित भएपछि पाँच वर्षसम्मै सांसद भई बस्न पाइने र पटक पटक जनतामा जान नपर्ने भएकाले सांसदहरू पनि बरु चुनाव जित्न करोडौं खर्च गर्ने र केन्द्रमा बसी विगतको खर्च असुल गर्ने नियतमा बढी तल्लीन देखिन्छन्।

यसरी नयाँ संविधान जारी भएर पनि वर्तमान संविधानले अपनाएको सुधारिएको संसदीय प्रणालीले जनताले अपेक्षा गरेको शान्ति, स्थायित्व तथा आर्थिक विकास पूरा हुन सकेको छैन। बरु सरकार सधैं अस्थिर भइराख्नु, छोटो-छोटो समयमा नै सरकार परिवर्तनका कुरा चल्नु र फेरि पनि प्राप्त राजनीतिक अधिकारहरू सधैँभरि जोखिममा परिराख्ने जस्ता परिघटनाले संविधान जारी गर्दा निर्वाचन पद्धतिमा गरिएको गल्ती सच्याई तुरुन्त संविधान संशोधन गरी प्रत्यक्ष निर्वाचित राष्ट्रपतिसहितको शासकीय प्रणाली जरुरी भएको छ ।

राजनीतिलाई पेसामुखीबाट पार लगाउनका निम्ति पनि यो शासकीय प्रणाली अत्यावश्यक छ। हाम्रो परम्परागत राजनीति र राजनीतिक दलहरूको राजनीतिक संस्कारले राजनीतिलाई पेसा बनायो। राजनीतिमा लागियो भने बिना लगानी प्रशस्त धन आर्जन गर्न सकिन्छ, राजनीतिक शक्ति र पहुँच पनि बढ्छ भन्ने मानसिकता कार्यकर्तामा हाबी भयो ।

राजनीतिक पहुँचका आधारमा कुनै नेता तथा दलको सम्बन्धमा कार्यकर्ताले कसैको सरुवा बढुवामा, कसैलाई ठेक्का दिलाइदिएर राजनीतिलाई नियमित कमाइ खाने पेसा बनाउन खोज्दा समस्या थप बल्झिन पुग्यो । त्यसैले राजनीतिलाई समाज सेवाका रूपमा लिई नेतृत्वलाई सिधा जनतासँग जोड्ने यो प्रणालीले मद्दत गर्छ । त्यसैगरी विविधताको सम्बोधन गर्न पनि यो प्रणाली उपयुक्त हुन्छ ।

नेपालमा १२५ जात र १२३ भाषा रहेको पृष्ठभूमिमा यो जनसाङ्ख्यिक विविधतालाई सम्बोधन गर्न, विभिन्न जाति र भाषीको आवश्यकता पूरा गर्न पनि यिनै जनताले प्रत्यक्ष रूपमा मत दिई निर्वाचित गर्ने राष्ट्र प्रमुख नै उपयुक्त हुनेमा दुई मत छैन । जनताको प्रत्यक्ष जनादेशका निम्ति पनि यो प्रणाली आवश्यक छ ।

किन हुनुपर्छ पूर्ण समानुपातिक निर्वाचन प्रणाली ?

पूर्ण समानुपातिक भएका देशहरूमा आर्थिक र सामाजिक समानता बढी हुने गरेको छ । राजनीतिमा अतिवाद हुने सम्भावना कम हुनुका साथै प्रतिनिधिमूलक लोकतन्त्रको उच्चतम अभ्यास हुन्छ । पूर्ण समानुपातिक प्रणालीमा सबै मतको प्रतिनिधित्व हुने गरी र दललाई खसालेको मतका आधारमा संसद्मा सङ्ख्या निर्धारण हुन्छ । पूर्ण समानुपातिक संसद्को आधारभूत सिद्धान्त सबै मतदाताको कदर हो । प्रत्यक्ष निर्वाचन प्रणाली (पहिलो हुने, निर्वाचित हुने) मा भने सबैभन्दा धेरै मत ल्याउने उम्मेदवार निर्वाचित हुन्छन् । अरू उम्मेदवारको मत एक प्रकारले ‘खेर’ जान्छ । यो निर्वाचन प्रणालीका धेरै खराबी छन्, जसमध्ये एक हो- सबै नागरिकको मतको प्रतिनिधित्व नहुनु । सबैभन्दा धेरै मत आउने उम्मेदवार संसद्मा जान्छन् तर सोही क्षेत्रमा अरू उम्मेदवारको मतको कतै पनि प्रतिनिधित्व हुँदैन । साथै, राज्यका संयन्त्रको सञ्चालनमा ठुला राजनीतिक दलहरूको एक प्रकारको ‘सिन्डिकेट’ स्थापित हुने सम्भावना हुन्छ । नेपालको राजनीतिमा ठुला दलहरूले ‘सिन्डिकेट’ का रूपमा व्यवहार गरेका उदाहरण पर्याप्त छन् । सबै मतको प्रतिनिधित्व हुने हुनाले पूर्ण समानुपातिक प्रणाली संसारभरि सबैभन्दा धेरै लोकतान्त्रिक देखिएको छ ।

अन्तर्राष्ट्रिय अभ्यास

दक्षिण अमेरिका, युरोपका धेरै र दक्षिण पूर्वी एसिया र अफ्रिकाका केहीसहित पूर्ण समानुपातिक निर्वाचन प्रणाली ८५ देशमा छ । समानुपातिक प्रणाली मुख्य दुई प्रकारका हुन्छन्, बन्द सूची र खुला सूची । बन्द सूची अहिले नेपालले अवलम्बन गरेको मिश्रित निर्वाचन प्रणालीको ४० प्रतिशत समानुपातिकको भाग हो, जसमा राजनीतिक दलले विधायिकाका लागि उम्मेदवारको सूची निर्वाचन आयोगलाई चुनाव पहिल्यै बुझाउँछ र दल आफैंले उम्मेदवारका क्रम सङ्ख्या निर्धारण गर्छ, यसमा मतदाताले उम्मेदवारलाई होइन दललाई मत हालेका हुन्छन् ।

युरोपका अधिकांश देशले भने समानुपातिकअन्तर्गत खुला सूची अभ्यास गर्छन् । खुला सूचीमा पनि दललाई नै मत हाल्ने हो तर यसमा दलको सूचीअनुरूप आफ्नो उम्मेदवारको प्राथमिकतालाई व्यक्त गर्न सकिन्छ । समानुपातिकअन्तर्गत खुल्ला सूचीमा केही हदसम्म मतदाताले आफूलाई मन परेको उम्मेदवारको वर्गीकरण गर्न सक्छन् र सर्वाधिक लोकप्रिय उम्मेदवार संसद्मा चुनिन्छन् ।

दललाई मत हालेकै आधारमा चुनिने भए पनि यसमा आफूलाई मन परेको उम्मेदवारलाई छान्ने अधिकार बन्द सूचीजस्तो राजनीतिक दललाई नभएर मतदाताकै हातमा हुन्छ । यस कारण पूर्ण समानुपातिक निर्वाचन प्रणालीमा गएको खण्डमा खुल्ला सूचीको अवधारणा अपनाए मतदाताको अझ प्रतिनिधित्व हुने थियो । फिनल्यान्ड, बेल्जियम र स्विट्जरल्यान्डलगायत देशमा यस्तै अभ्यास छ ।

निष्कर्षमा नेपालमा एकपछि अर्को निर्वाचन बढीभन्दा बढी खर्चिलो भइरहेको छ । पार्टीका उम्मेदवार एवं राज्य दुवैले गर्ने निर्वाचनसम्बन्धी खर्च बजारको महँगीको दरभन्दा बढी छ । हरेक समयमा उम्मेदवारबाट गरिएका खर्च अपारदर्शी हुने गरेका छन् । खर्चिलो निर्वाचन समृद्धिको लक्ष्य प्राप्तिको बाधक हो र यसले भ्रष्टाचारलाई बढवा दिएको छ । प्रजातन्त्र संरक्षण गर्न निर्वाचनको खर्च घटाउनुबाहेक हामीसँग कुनै अर्को विकल्प छैन । अहिलेको मिश्रित निर्वाचन प्रणाली परिवर्तन गर्नु आवश्यक छ । पूर्ण समानुपातिक निर्वाचनलाई बढवा दिनुपर्छ, ताकि सबै मतदाताले व्यक्तिलाई नभई पार्टीका लागि मतदान गर्नेछन् र त्यसले निर्वाचन खर्च घटाउन सहयोग पुग्छ ।

अर्कोतर्फ पूर्ण समानुपातिक निर्वाचन प्रणालीले समाजलाई विचारतिर डोर्‍याउँछ । अहिलेको व्यक्ति केन्द्रित समाज विचारका बारेमा बढी छलफल गर्न उत्सुक हुन्छ र विचार एवं व्यवहार बोकेको पार्टीलाई भोट हाल्ने वातावरण निर्माण हुन्छ । पूर्ण समानुपातिक निर्वाचन प्रणालीले सुदृढ पार्टीको निर्माण र समाजमा शुद्ध आचरण निर्माण गर्ने एकखाले होड नै चल्छ । सामाजिक मर्यादा र अनुशासनको पक्षलाई बलियो ढङ्गले लिनका लागि पनि यो प्रणाली हाम्रो जस्तो गरिब र पछौटेपना बोकेको मुलुकका लागि अपरिहार्य बनिसकेको छ ।

पूर्ण समानुपातिक निर्वाचन र प्रत्यक्ष निर्वाचित कार्यकारीमा जानु लोकतन्त्रलाई थप सुदृढ पार्दै जनतालाई नै अधिकार सम्पन्न बनाउनु हो । अझ भर्खरै सर्वोच्चले समानुपातिक निर्वाचन प्रणालीबारे गरेको व्याख्याले पनि यसको महत्त्व दर्साइदिएको छ । समानुपातिक प्रणालीलाई शोषण, उत्पीडनमा परेकालाई स्थान दिन भनेको सर्वोच्चले तरमारा वर्गबारे समेत सचेत व्याख्या गरेको छ । यसले पूर्ण समानुपातिक निर्वाचन प्रणालीको महत्वलाई थप उजागर गरिदिएको छ ।

अर्को सवाल हो, प्रत्यक्ष निर्वाचित कार्यकारी । अहिलेसम्म बनेका सरकार, सरकार बन्न चालिएका कदम र पूर्वप्रधानमन्त्रीको क्लबजस्तो बनिसकेको मुलुकलाई स्थिर सरकार दिनु आजको आवश्यकता हो । यसका लागि प्रत्यक्ष निर्वाचित कार्यकारीमा जानुको विकल्प छैन । हुन त कतिपयले प्रत्यक्ष निर्वाचित कार्यकारी निरङ्कुश बन्ने तर्क पनि गरेको देखिन्छ । तर, संसद्ले प्रत्यक्ष निर्वाचितलाई नियमन गर्न सक्ने नै हुँदा निरंकुशताको प्रश्न नै आउँदैन । अहिलेको निर्वाचन प्रणालीबाट निर्वाचित कार्यकारीले संविधान नमिचेको कहाँ होर ? तर, जनताको बलमा त्यसलाई निस्तेज पारिको घटना लुकेको छैन ।

दल र विचार प्रधान बनाउनका लागि पनि यो आवश्यक छ । पपुलिज्मवादलाई परास्त गर्दै लोकतन्त्रलाई सुदृढ पार्ने एक मात्र प्रणाली भनेकै पूर्ण समानुपातिक निर्वाचन र प्रत्यक्ष निर्वाचित कार्यकारी हो । यसतर्फ जान ढिला गर्न हुन्न ।

शेर्पा नेकपा (माओवादी केन्द्र) का वैकल्पिक केन्द्रीय सदस्य हुन् ।

रातोपाटीबाट

# महादेव पोखरीको इतिहास बुझाउने शिलापत्र

भक्तपुर । भक्तपुरको प्रसिद्ध मुहानपोखरीको इतिहाससँग सम्बन्धित शिलालेख अनावरण गरिएको छ ।

चाँगुनारायण नगरपालिका वडा नं ६ को उक्त पोखरीको ऐतिहासिक जानकारी उत्किर्ण गरिएको शिलालेख सोमबार पोखरी परिसरमा अनावरण गरिएको हो । धार्मिक र प्राकृतिक महत्त्वको उक्त पोखरीको ऐतिहासिक पृष्ठभूमि बारेको शिलापत्रको अनावरण इतिहास तथा संस्कृति खोजकर्ता एवम् जेष्ठ नागरिक प्रेम प्रसाद काफ्लेले गरेका थिए ।

शिलापत्रमा ञॐ नमः सृष्टिकालमा ब्रम्हाजीले यस स्थानमा कुण्ड निर्माण गरी रत्नको शिवलिङ्ग स्थापना गर्नु भएकोले यस लिङ्गको नाम रत्नचुण्डेश्वर रहन गएको कुरा स्कन्द पुराणको हिमवत्खण्डको १२३।८ श्लोकमा वर्णन गरिएको छ । यस पुण्यभूमि रत्नचूड पर्वतको पवित्र धाम चन्दनीय सिद्ध भूमि हो,भ्क भनिएको छ। यसैगरी सोही शिलापत्रमा ञसमुन्द्र मन्थन गर्दा निस्किएको कालकुट विष पिएका भगवान श्री महादेवले विषको डाहा सहन नसकि हिमालय कैलाश पर्वत जाने क्रममा यस तीर्थस्थलमा आई स्नान गर्नुभएकोले यस ठाउँको नाम महादेव पोखरी भएको किम्बदन्ती रहेको छ । श्री महादेवले यसै कुण्ड/पोखरीबाट आफूले पिएको विष बगाउन नौ धारा सहित नदीहरुः हलाहल, चम्पा, चन्द्रावती, पुण्यमाता, बोधिनी, सवर्णा, भद्रा बीला र बाघहिनी प्रवाहित गर्नुभएकोभ्क भन्ने किम्बदन्ती समेत उल्लेख छ ।

सो पवित्र धाममा प्रत्येक बर्ष श्रावण शुक्ल पूर्णिमाको दिन भक्तजनहरुले स्नान गरि ध्यान जप गर्ने, रुद्रि पाठ गर्ने, जनै मन्त्रण गर्ने, रक्षा बन्धन बाधि श्री रत्नचुण्डेश्वर महादेवको विशेष आराधना गर्ने परम्परा चलि आएको छ ।

शिलापत्र तयार गर्नका लागि खोजकर्ता प्रेम प्रसाद काफ्ले चा.न.पा. ७ बागेश्वरी नेपाली सेनाका साथै समाजसेवी रविन्द्रप्रताप शाहलगायतले सहयोग गरेका थिए । हाल सोही ठाउँमा श्री रत्नचुण्डेश्वर महादेव पोखरी संरक्षण समितिले अतिरूद्र महायज्ञ सञ्चालन गरिरहेको छ ।

# महादेव पोखरीको इतिहास बुझाउने शिलापत्र

नेपाल स्काउट, बाग्मती प्रदेश, स्थानीय स्काउट कार्यालय, मध्यपुर थिमिले प्रथम मध्यपुर स्काउट नगर परिषद् बैठक सम्पन्न गरेको छ । मध्यपुर थिमि नगरपालिकाका उप-प्रमुख तथा परिषद् अध्यक्ष विजयकृष्ण श्रेष्ठको अध्यक्षतामा बसेको उक्त बैठकमा अध्यक्षबाट प्रस्तुत गरिएको आ.व. २०८०/८१ को प्रगति प्रतिवेदन र बित्तीय आयुक्त श्री संगिता श्रेष्ठबाट प्रस्तुत गरिएको आर्थिक प्रतिवेदन तथा आ.व. २०८१/८२ को नीति तथा कार्यक्रमसहित अनुमानित बजेट पारित गरिएको थियो । साथै, स्काउट तालिम केन्द्र निर्माण, स्थानीय स्काउट दर्ता अभियान तथा स्काउट शिक्षक दरबन्दीको लागि पनि नगरपालिकासंग विशेष अनुरोध गर्ने निर्णय पारित गरिएको थियो । स्वागत मन्तव्य राख्दै स्थानीय स्काउट कार्यालयका स्थानीय आयुक्त श्री तुल्सीहरि प्रजापतिले मध्यपुर स्काउटले गरेका उल्लेखनीय कार्यहरूको चर्चा गर्दै मध्यपुर स्काउटलाई देशकै नमुना स्काउट बनाउने अभियानमा सबै जना हात्तेमालो गरि अघि बढ्नुपर्ने कुरा जोड दिए । प्रस्तुत प्रतिवेदनहरू उपर छलफल कार्यमा सहभागी भई नेपाल स्काउट, बाग्मती प्रदेश, स्थानीय स्काउट कार्यालय, मध्यपुर थिमिका पूर्व स्थानीय आयुक्त तथा सहायक राष्ट्रिय प्रशिक्षक हरि बहादुर श्रेष्ठले मध्यपुर स्काउटको द्रुत बिकासको लागि युवा परिचालन सशक्त बनाउनु पर्ने धारणा व्यक्त गरे । अतिथिको मन्तव्य राख्दै नेपाल स्काउटका पूर्व राष्ट्रिय सचिव रामगोपाल कर्माचार्यले मध्यपुर स्काउटको गर्विलो ईतिहाससँगै नेतृत्व-वर्गको मुक्त-कण्ठले प्रशंसा गरे । साथै, प्रस्तुत प्रतिवेदनहरू उपर छलफल कार्यमा सहभागी भई सदस्यता बृध्दि आयुक्त तथा राष्ट्रिय प्रशिक्षक भुवनचरण श्रेष्ठ, आदर्श मा.बि., लायकू, थिमिका प्राचार्य बुद्धि कुमार घो, बिनायक शिक्षा निकेतनका प्रिन्सिपल सुरेन्द्र बिक्रम प्रजापति, सिद्धिकाली क्षेत्र संरक्षण तथा बिकास कोषका अध्यक्ष दिलकृष्ण प्रजापतिले सल्लाह-सुझावसहित आ-आफ्ना धारणा व्यक्त गरे । नेपाल स्काउट, बाग्मती प्रदेशका प्रमुख आयुक्तले वर्तमान स्काउटिङ्ग अभियानका चुनौती एवम् अवसरका बारेमा आफ्नो बिचार व्यक्त गरे । परिषद्का सदस्य-सचिव ज्ञानेन्द्र प्रसाद भट्टले सञ्चालन गरेको बैठकमा उपस्थित सम्पूर्णमा धन्यवाद ज्ञापन गरेको सो बैठकमा अध्यक्षता गरेका अध्यक्ष बिजयकृष्ण श्रेष्ठले मध्यपुर स्काउटको प्रशंसासहित सुन्दर, शान्त र सु-संस्कृत समाज निर्माणमा खेलेको भूमिका अझ उत्कृष्ट बन्दै जाओस् भनी शुभकामना दिए । सो भेलाले १५ बुँदे निर्देशनसमेत पारित गरेको छ ।

# खाद्य कम्पनीको सिइओमा गोपीकृष्ण न्यौपाने

काठमाण्डौ । २०७७ माघ अघि उदयपुर सिमेण्ट उद्योगको अवस्था जर्जर थियो । उद्योग बन्द अबस्थामा थियो, कोइला, जिप्सम, आइरन ओर जस्ता कच्चापदार्थको स्टक थिएन, निकै ठूलो संख्यामा अवकाश प्राप्त कर्मचारीहरु उपदान र औषधी उपचारको रकम नपाएर क्यूमा रहेका थिए । २०७७ असार देखि राजस्व, संचयकोष, नागरिक लगानी कोष, कर्मचारी बिमाको रकम जम्मा भएको थिएन, कार्तिक देखिको तलब ओटी बांकी थियो, बिधुत महसुल तिरिएको थिएन अर्थात समग्रमा भन्नुपर्दा ६५ करोड भन्दा माथिको चालू दायित्व रहेको अवस्था थियो ।

माघ १ गते नेपाल सरकारले महाप्रबन्धकको रुपमा गोपी कृष्ण न्यौपानेलाई उदयपुर सिमेन्ट उद्योगमा नियुक्त गरेपछि बन्द उद्योग फेरी सुचारु हुन थाल्यो ।

न्यौपानेले महाप्रबन्धकको कार्यभार सम्मालेपछिको दोस्रो आर्थिक बर्षमा उदयपुर सिमेन्ट उद्योग ४ करोड ९३ लाख रुपैयाँ खुद नाफा गएको अर्थ मन्त्रालयले सार्वजनिक गरेको आर्थिक वर्ष २०७८/७९ मा सार्वजनिक संस्थानहरूको वित्तीय अवस्था बारेको प्रतिवेदनमा उल्लेख छ ।

मर्मत सम्भारमा ध्यान दिनु, फजुल खर्च कटौती र उत्पादनमा बृद्धि भएको कारण नाफामा देखिएको हो । आब ०७८/०७९ को सार्वजनिक संस्थानहरूको वित्तीय अवस्थाको प्रतिवेदनका अनुसार उदयपुर सिमेन्ट उद्योगको आर्थिक वर्ष २०७७/७८ को तुलनामा ०७८/०७९ मा १४.४१ प्रतिशतले सञ्चालन आयमा वृद्धि गरेकाले समग्र औद्योगिक क्षेत्रका संस्थानको सञ्चालन आयमा वृद्धि भएको छ ।

महाप्रबन्धक न्यौपानेको कुशल व्यवस्थापकिय क्षमताको कारण ०७८/७९ मा उद्योगले भ्याटबापत १८ करोड ८२ लाख ६२ हजार २ सय २७ रुपैयाँ बुझाएको छ भने अन्तःशुल्कबापत २ करोड ३८ लाख ९६ हजार ६ सय ९ रुपैयाँ राजस्व तिरेको उदयपुर सिमेन्ट उद्योगले जनाएको छ ।

त्यतीमात्र होईन न्यौपानेको कार्यकालमा उद्योगले अग्रिम कर १ करोड ६० लाख २ ९ हजार ९ सय ७९, रोयल्टी ८३ लाख ५२ हजार ५ सय ८०, प्रदूषण शुल्क ५४ लाख ३२ हजार, विद्युत् महसुल २० करोड ७५ लाख ४० हजार गरेर ४४ करोड ९५ लाख १४ हजार रुपैयाँ करबापत बुझाएको छ ।

खुल्ला प्रतिष्पर्धा मार्फत दुईबर्ष अघी २०७७ साल पुष २० को मन्त्रीपरिषद्को निर्णयबाट नियुक्त महाप्रबन्धक न्यौपानेको दुई बर्षको कार्यसम्पादन उत्कृष्ट भएको भन्दै एक बर्षको म्याद थप गरि तीन बर्ष कायम गरेको थियो ।

दुई दशक भन्दा बढि निजी तथा वित्तिय संस्था, लेखापरीक्षक, कानुन व्यवसायी एक दर्जन भन्दा बढी संघसंस्थामा कुशल जिम्मेवारी पुरा गरेर अनुभव लिनुभएका न्यौपानेले छाडेपछि अहिले उदयपुर सिमेन्ट उद्योग झन उधो गतिमा गएको छ ।

तत्कालिन उद्योग व्यवस्थापन र मन्त्रालयको असहयोगको कारण ६ महिना अघि उदयपुर सिमेन्टबाट विदा हुनु भएका न्यौपाने अहिले खाद्य व्यवस्था तथा व्यापार कम्पनीको सिइओ खुल्ला प्रतिस्पर्धाबाट तीन जनामा एक नम्बरमा सिफारिसमा पर्नु भएको छ ।

सायद यही हप्ता बस्ने मन्त्रीपरिषदको बैठकले खाद्य कम्पनीको सिईओको टुङ्गो लगाउने छ । लामो समयदेखि नेतृत्वविहीन हुँदा निकै नै अस्तव्यस्त बनेको खाद्य व्यवस्था तथा व्यापार कम्पनी लिमिटेडले तीन जना प्रतिस्पर्धीको नाम सिफारिस गरेसँगै खाद्यले नेतृत्व पाउने लगभग पक्का भएको हो ।

प्रमुख कार्यकारी अधिकृतको लागि दरखास्त आव्हान भएकोमा १८ जनाले आवेदन दिएका थिए । नियुक्ति सम्बन्धी निर्देशिकाको अधीनमा रही कुल १०० पूर्णाङ्कको परीक्षामा सबैभन्दा बढी अङ्क प्राप्त गर्ने तीन जनाको नाम उद्योग, वाणिज्य तथा आपूर्ति मन्त्रालयले सूचना प्रकाशित गर्दै मन्त्रीपरिषद्को बैठकमा निर्णयको लागि प्रस्ताव पठाएको जानकारी दिएको हो ।

सिफारिस भएका मध्ये पहिलो नम्बरमा रहेका न्यौपाने बलियो दावेदार रहेका छन । सिफारिस समितिका एक सदस्यका अनुसार छनौटमा परेका तीन जनालाई छान्ने आधार मध्ये एक त्यही कार्यरत, दोस्रो नवीन सोचयुक्त युवा भए पनि अनुभवको कमी र तेस्रो अनुभवी, सक्षम अनि निजी तथा सार्वजनिक दुवै प्रकारको संस्था बुझ्केको व्यक्ति पहिचान गरिएको हो । छनौटमा परेका मध्ये न्यौपाने भने अनुभवी व्यक्ति मानिन्छन् ।

एमबिए तथा एलएलएम गरेका न्यौपानेसँग २४ वर्ष सिजीको महाप्रबन्धकको रूपमा काम गरेको अनुभव छ । यसबाहेक उनले वित्तीय क्षेत्र अन्तर्गत माछापुच्छ्रे बैंकको सञ्चालकका रूपमा १० वर्ष काम गरिसकेका छन् । सार्वजनिक संस्थानकै नेतृत्वकर्ताका रूपमा गोपीकृष्ण न्यौपानेले उदयपुर सिमेन्टको महाप्रबन्धकको जिम्मेवारी समेत कुशलतापूर्वक सम्हालिसकेका छन् । उनको नेतृत्वमा लामो समयदेखि घाटामा रहेको सो सिमेन्ट उद्योगले नाफा आर्जन गर्न थालेको थियो भने वर्षौंसम्म हुन नसकेको साधारण सभा र लेखा परिक्षणकोकाम समेत गरेर उनी अढाई वर्षमा बिदा भएका थिए ।

न्यौपाने पेसाले 'ख' वर्गको लेखा परीक्षक र अधिवक्ता पनि हुन् । अस्पताल, शिक्षण संस्था लगायत एक दर्जन सामाजिक संस्थामा काम गरेको अनुभव पनि छ, उनीसँग । त्यसैले अबको ४ वर्षको लागि न्यौपानेलाई नै खाद्य व्यवस्था तथा व्यापार कम्पनीको प्रमुख कार्यकारी अधिकृतका रूपमा मन्त्रिपरिषद्ले छान्न सक्ने सम्भावना प्रबल प्रबल रहेको सिइओ छनौट प्रक्रियालाई नजिकबाट नियालिरहेका खाद्यका हाकिमहरू बताउँछन् ।

सिफारिसमा परेका मध्ये तनहुँका डिल्लीराम लम्साल खाद्य व्यवस्था तथा व्यापार कम्पनीकै डिजिएम तथा हाल निमित्त प्रमुख कार्यकारी अधिकृत हुन् । लम्सालको विरुद्ध कम्पनीमा गैर कानूनी कार्यहरु गरी राज्यलाई नोक्सानी पुर्याई भ्रष्टाचार गरेको भनि अख्तियार दुरुपयोग अनुसन्धान आयोग र राष्ट्रिय सतर्कता केन्द्रमा उजुरी परेर अनुसन्धानको गरी रहेकाले उनी विवादित व्यक्ती हुन ।

सिफारिसमा परेका अर्का उम्मेदवार हुन्, रमेश आचार्य । उनको अनुभव उद्योग, वाणिज्य महासङ्घमा मात्रै रहेकोले सार्वजनिक संस्था सञ्चालन गर्ने विधि र पद्धतिमा रहेको नदेखिएको छनौटकर्ता नै बताउँछन् ।

साबिक खाद्य संस्था र नेशनल ट्रेडिङ्ग लिमिटेड मर्ज भई बनेको कम्पनी हो । नेपाल सरकारको पूर्ण स्वामित्वमा रहेको यो कम्पनीले विशेषगरी मुलुकका दुर्गम क्षेत्रहरूमा खाद्यान्न आपूर्ति व्यवस्थापन गर्ने गरेको छ । सहरी क्षेत्रमा समेत खाद्यान्न व्यवस्था गरिरहेको यस कम्पनीले नेशनल ट्रेडिङ गाभिइसकेपछि व्यापार गर्ने अवसर पनि पाएको थियो । तर, यसले उद्देश्य बमोजिम कार्य गर्न सकिरहेको देखिँदैन ।

# वरिष्ठ मुटुरोग विशेषज्ञ प्रा.डा. कोजु सम्मानित

धुलिखेल । 'गुणलक्ष्मी स्मृति रोटरी स्वास्थ्य सम्मान' बाट वरिष्ठ मुटुरोग विशेषज्ञ प्रा.डा. राजेन्द्रप्रसाद कोजु सम्मानित भएका छन् । काठमाडौं विश्व विद्यालय स्कूल अफ मेडिकल साइन्सेजका पूर्व डीन उनी धुलिखेल अस्पतालमा कार्यरत छन् ।

रोटरी क्लब अफ पनौतीको नवौं पदस्थापना समारोहका अवसरमा प्रा.डा. कोजू सम्मानित भएका हुन् । रोटरी क्लब अफ पनौतीका संस्थापक अध्यक्ष एवं वरिष्ठ स्त्री तथा प्रसूति रोग विशेषज्ञ प्रा.डा. सुमनराज ताम्राकारले दिवंगत माता गुणलक्ष्मी ताम्राकारको स्मरणमा रोटरी क्लब अफ पनौतीबाट वर्षेनी स्वास्थ्य विशेषज्ञलाई प्रदान गर्ने गरी सो सम्मान स्थापना गरेको हो ।

पहिलो पटक वरिष्ठ मुटुरोग विशेषज्ञ प्रा.डा. कोजुलाई सो सम्मान प्रदान गरिएको हो । पनौतीको डायमण्ड हिल रिसोर्टमा आयोजित समारोहमा प्रमुख अतिथि रोटरी इन्टरनेशनल डिष्ट्रिक्ट ३२ ९२ नेपाल-भुटानका पूर्व गभर्नर सिए जितेन्द्रबहादुर राजभण्डारीले उनलाई नगदसहित सम्मान प्रदान गरेको हो । यसैगरी प्रा.डा. ताम्राकारले पिताको स्मरणमा स्थापना गरेको 'पुष्पराज स्मृति रोटरी पत्रकारिता सम्मान' काभ्रेपलाञ्चोक जिल्लाबाट २८ वर्षदेखि निरन्तर प्रकाशित काभ्रे टाईम्स साप्ताहिकलाई प्रदान गरिएको छ । साप्ताहिकका कार्यकारी सम्पादक रमेशप्रसाद न्यौपानेलाई अतिथि रोटरी इन्टरनेशनल डिष्ट्रिक्ट ३२९२ नेपाल-भुटानका पूर्व गभर्नर सिए राजभण्डारीले उनलाई नगदसहित सम्मान प्रदान गरेको हो ।

# आदर्श माविका १२ पासलाई सम्मान

भक्तपुर । मध्यपुर थिमिको लायक्कुस्थित आदर्श माध्यमिक विद्यालयले कक्षा १२ (एसएलसी) परीक्षा २०८० मा सफल विद्यार्थीहरुलाई बधाई दिदैं सम्मान गरेको छ ।

विद्यालयका प्राचार्य बुद्धिकुमार घो को सभापतित्वमा शनिबार भएको बधाई तथा सम्मान कार्यक्रमको उद्घाटन गर्दै मध्यपुर थिमि नगर प्रमुख सुरेन्द्र श्रेष्ठले शिक्षाको गुणात्मक विकासमा आदर्श मावि लाय्कुले पु-याएको योगदानको प्रशंसा गर्दै शुभकामना व्यक्त गरे । नगरप्रमुख श्रेष्ठले कक्षा १२ को नतिजामा जिपिए ए ल्याउने खुसन खनाललगायत विद्यार्थीलाई सम्मान गर्दै समाज निर्माणको आधार शिक्षाको गुणात्मक विकासमा नगरपालिका योजना सहित अघि बढेको बताए ।

कार्यक्रमका विशेष अतिथि मथिनपाका नगर उपप्रमुख विजयकृष्ण श्रेष्ठले सामुदायिक विद्यालयको स्तर उकास्न नगरपालिकाले गरेका कार्यहरुको बुँदागत जानकारी दिदैं दैनिक जीवनमा व्यवस्थापन विषयको अध्ययन जरुरी रहेको बताए ।

विद्यालय व्यवस्थापन समितिका अध्यक्ष समेत रहेका उपमेयर श्रेष्ठले पढाईसँगै विद्यार्थीको व्यक्तित्व र नेतृत्व विकास जरुरी रहेको भन्दै विद्यार्थीहरुलाई शुभकामना दिए ।

विद्यालयका प्राचार्य घो श्रेष्ठले विद्यालयको शैक्षिक, अतिरिक्त क्रियाकलापदेखि खेलकुदका गतिविधिबारे प्रष्ट पार्दै प्रमाणपत्रमा मात्रै उत्कृष्टता नभई व्यवहारमा पनि विद्यार्थीहरुमा समानता, शालीनता र शिष्टता प्रदर्शित हुनुपर्नेमा जोड दिए । प्राचार्य घो श्रेष्ठले कर्तव्यनिष्ट एवं लगनशील शिक्षक समूह, मेहेनती अनुशासित विद्यार्थी र सहयोगी अभिभावकको त्रिकोणात्मक सम्बन्धबाट मात्र शैक्षिक सफलता प्राप्त हुने तर्क गरे ।

कार्यक्रममा मथिनपा शिक्षाशाखा प्रतिनिधि कुमारी शान्ति धामी, वरिष्ठ नेपाली शिक्षक एवं साहित्यकार जीवनाथ अधिकारी लगायतका अतिथि वक्ताहरुले संस्कारयुक्त व्यवहारिक ज्ञानको महत्व सहित शुभकामना मन्तव्य व्यक्त गरे ।

उक्त कार्यक्रममा कक्षा १२ को नतिजामा उत्कृष्ट अंक ल्याएका छात्र खुशन खनाल कक्षा १२ अध्ययनरत छात्रा गंगा बुढाथोकीलगायतले आ-आफ्नो धारणा व्यक्त गरेका थिए ।

कार्यक्रममा कक्षा १२ मा अध्ययनरत छात्रछात्राहरुले उत्कृष्ट नृत्य, गायन प्रस्तुत गरेका थिए । उक्त सांगितिक अनि सांस्कृतिक कार्यक्रममा रम्दै विद्यार्थीहरुले गीत, कविता, गजल अनि मुक्तक पनि सुनाएका थिए ।

# विनायकमा एसइइ उत्तीर्ण विद्यार्थीहरूलाई बधाई तथा विदाई

भक्तपुर । गुणस्तरीय शिक्षाका माध्यमबाट अब्बल तथा सक्षम विद्यार्थी उत्पादनमा जोड दिँदै हरेक वर्षको एसइइ परीक्षामा उत्कृष्ट नतिजाका साथ विद्यार्थी उत्तीर्ण गराउन सफल विनायक शिक्षा निकेतन इङ्लिस स्कुल, मध्यपुर थिमिले गत साउन २६ गते शनिबार एसइइ उत्तीर्ण विद्यार्थीहरूको सम्मानमा बधाई तथा विदाई कार्यक्रमको आयोजना गरेको छ ।

विद्यालय व्यवस्थापन समितिका अध्यक्ष गणेशराम लाछीको सभापतित्व तथा मध्यपुर थिमि नगरपालिका वडा नम्बर ५ का वडा अध्यक्ष बालकृष्ण श्रेष्ठको प्रमुख आतिथ्यतामा आयोजित उक्त कार्यक्रममा शैक्षिक सत्र २०८० मा विनायकबाट उत्तीर्ण ७० जना विद्यार्थी, हाल कक्षा १० मा अध्ययनरत विद्यार्थी तथा अभिभावक एवं शिक्षक शिक्षिकाहरूको उपस्थिति रहेको थियो ।

विद्यालयका सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाले स्वागत गरेको उक्त कार्यक्रममा अतिथिहरू धनागिरी, शान्ति धामी, नवीन श्रेष्ठ, बाबुकाजी श्रेष्ठ तथा उषा प्रजापति लगायतले गुणस्तरीय र जीवनोपयोगी शिक्षा प्रदान गर्ने क्रममा विनायक शिक्षा निकेतनले दिएको योगदानको चर्चा गर्दै कक्षा ११ र १२ मा समेत यस्तै नतिजा ल्याएर आफ्नो भविष्य उज्ज्वल बनाउन सम्पूर्ण एसइई उत्तीर्ण विद्यार्थीहरुलाई बधाई तथा शुभकामना दिएका थिए ।

कार्यक्रममा विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले शैक्षिक गुणस्तरीयता कायम गर्नका लागि स्थापना कालदेखि नै विद्यालयले जोड दिँदै आएको र गुणस्तरीयताका लागि कुनै कसर बाँकी नराखेको तथा पटकपटक एसइइको नतिजामा नयाँ इतिहास रच्न सफल भएको र यस्तै युग सुहाउँदो वैज्ञानिक सोचको प्रगतिशील मूल्य मान्यताको शिक्षा प्रदान गर्न विद्यालय अघि बढिसकेको कुरा बताए ।

कक्षा १० का विद्यार्थीहरू सायाबुङ राई र सवीरा श्रेष्ठद्वारा सञ्चालित उक्त कार्यक्रममा कक्षा १० मा अध्ययनरत तथा एसइइ पास आउट विद्यार्थीहरूले सांस्कृतिक कार्यक्रम समेत प्रस्तुत गरेका थिए ।

# इजरायली सुरक्षामा अमेरिकाको लक्ष्य

एजेन्सी । इजरायल र इरानबीच युद्धको सम्भावनाका कारण विश्वभर त्रासको वातावरण छ । योसँगै अमेरिकाले आफ्नो ' मित्र' बचाउनका लागि सबै टुक्राहरू लगाएको छ । अमेरिकाले यसअघि इरान नजिकै भूमध्यसागरमा ँ-घछक्ष्र लडाकु विमानहरूले सुसज्जित युद्धपोत पठाएको थियो र अब त्यहाँ मिसाइल पनडुब्बी पनि तैनाथ गरेको छ। यो पनडुब्बी ज्ञछद्ध त्कबजबधप मिसाइलहरूले सुसज्जित छ, जसले जमिनमा कुनै पनि लक्ष्यलाई सही रूपमा प्रहार गर्न सक्छ।

वास्तवमा, तेहरानमा हमासका प्रमुख इस्माइल हानियाको हत्या र बेरुत आक्रमणमा हिजबुल्लाह कमाण्डर फुआद शुक्रको मृत्यु भएपछि मध्यपूर्वमा तनाव छ। यहाँ हिजबुल्लाह र इरानले इजरायलबाट बदला लिने वाचा गरेका छन् भने अर्कोतर्फ अमेरिका आफ्नो मित्रलाई सहयोग गर्न खडा भएको छ । वास्तवमा, इजरायली रक्षा मन्त्री योभ गैलान्टले आइतबार अमेरिकी रक्षा मन्त्री अस्टिनलाई इरानले इजरायलमा ठूलो सैन्य आक्रमणको तयारी गरिरहेको बताए। त्यसको लगत्तै, पेन्टागनले कारबाही गऱ्यो र भन्यो कि यसले मध्य पूर्वमा थप सेना र सैन्य उपकरणहरू पठाउँदैछ।

इरानले योजना परिवर्तन गर्न सक्छ

अमेरिकी रक्षामन्त्री लोयड अस्टिनले स्पष्ट रूपमा भनेका छन् कि अमेरिकाले आफ्नो सहयोगीलाई बचाउन 'सम्भव सबै कदम चाल्नेछ'। यससँगै उक्त क्षेत्रमा पहिल्यै जाने विमानवाहक जहाज अब छिट्टै पुग्ने पनि उनले बताए ।

इजरायलको सुरक्षामा अमेरिकाको तत्परताका कारण धेरै विज्ञहरूले इरानले अब प्रत्यक्ष आक्रमण नगर्ने तर हिजबुल्लाहमार्फत आक्रमण गर्न सक्ने विश्वास गर्छन्। इजरायलको छेउमा रहेको लेबनानमा रहेको यो अत्यन्त शक्तिशाली मिलिशियालाई इरानले निरन्तर सहयोग गर्दै आएको छ र उसले आफ्ना कमाण्डर फुआद र हमास नेता हानियाको मृत्युको बदला लिने वाचा पनि गरेको छ ।

हमास युद्धले त्रसित

अर्कोतर्फ, हमास प्रमुख याह्या सिनवार अब इजरायलसँग युद्ध रोक्न चाहन्छन्। सिन्वारले युद्धविरामको इच्छा व्यक्त गरेपनि वार्तालाई थप तान्नुभन्दा पहिले स्वीकृत प्रस्ताव कार्यान्वयन गर्ने योजना पेश गर्न मध्यस्थकर्तालाई आग्रह गरेका छन् ।

इजिप्ट, कतार र अमेरिकाका नेताहरूले अगस्ट ८ मा इजरायल र हमासलाई युद्धविराम सम्झौतालाई अन्तिम रूप दिन र वार्ता पुनः सुरु गर्न थप समय खेर नफाल्न आग्रह गरेका थिए। तर, इजरायलका प्रधानमन्त्री बेन्जामिन नेतान्याहु के चाहन्छन् भन्ने कुरा अझै स्पष्ट भइसकेको छैन। दुई इजरायली स्रोतहरूले भने कि नेतान्याहूका सहयोगीहरूले पत्रकार र अन्य सरकारी अधिकारीहरूलाई इजरायली प्रधानमन्त्री सम्झौता गर्न तयार रहेको बताएका छन्। उहाँको गठबन्धन सरकारमा जतिसुकै प्रभाव परोस् ।

# पुराना लोक बाजा, गीत-सङ्गीतको संरक्षणमा गजेन्द्र राई

पाँचथर - पर्यटकीय स्थलको पहिचान बनाएको फिदिम नगरपालिका -१३ जेभालेका गजेन्द्र राई आन्तरिक पर्यटन प्रवर्धनका लागि स्थानीय लोकभाकामा तल्लीन छन् । उनले जेभाले आइपुग्ने जोकोहीलाई सारंगी, मुर्चुंगा, बिनायो, मादल र घिउपाते जस्ता बाजा बजाएर गीत गाउँदै नचाउने गर्छन् । उनको तिनै विशेषताका कारण तीन,चारजना मान्छे भेला हुनासाथ घर अगाडि सारंगी र मादल लिएर घरबाहिर निस्किने गजेन्द्र राई पुराना लोकभाकामा आन्तरिक पर्यटकलाई मनोरञ्जन दिन्छन् । उनले

'रेसम फिरिरि', 'झम्के फूली नाकैमा बुलाकी', 'ओल्लो खोलो पल्लो खोलो कमिलाको गोलो', 'आलु दम चाना', 'चलेछ बतास सुस्तरी', 'किरेमिरे जाली रुमाल', 'छमछम नाचिदेऊ निउरेर', 'उकालीमा अघिअघि पछिपछि यो केटी के भाको' लगायतका गीत गाउँदै सारंगी र मादल बजाएर आगन्तुकलाई छमछमी नचाउने कला गजेन्द्रसँग छ । गजेन्द्रले सारंगी बजाउँदै गीत गाउन थालेपछि कोही लय मिलाउँदै मादल बजाउँछन्, त कोही मुरली र बाँसुरी बजाएर सार मिलाउँछन् । त्यसलगत्तै नृत्यका पारखीहरू छमछमी नाचेर मनोरञ्जन गर्न थाल्छन् । यो जेभाले पर्यटकीय स्थल हो । यहाँ चट्टानी पहाडको टाकुरामा रहेका ठुल्ठूला ढुङ्गा काटेर बनाइएका मुन्धुम स्थल, चट्टान बाटिका, राष्ट्रिय विभूति महागुरु फाल्गुनन्द, शान्तिका अग्रदूत गौतम बुद्ध र महादेवका ठुल्ठूला सालिकसँगै गुप्तेश्वर महादेव थान हेर्न दैनिक २५, ३० जना आन्तरिक पर्यटक जान्छन् । जेभालेमा शनिबार र बिदाका दिन त टाढाटाढाबाट झन्डै सयको संख्यामा पर्यटक जान्छन् । गजेन्द्रले यहीँ पर्यटकीय स्थानमा पुग्नेलाई भरपुर मनोरञ्जन गराएबापत कुनै शुल्क लिँदैनन् ।

आन्तरिक पर्यटन प्रवर्धनसँगै पुराना लोक बाजा र गीत-सङ्गीतको संरक्षणका लागि आफूले यो अभियान चलाएको बताउदै गजेन्द्र भन्छन्,' सानो छँदा सङ्गीत मेरो सौख थियो । उबेला सारंगी सिक्ने अवसर नमिलेको भन्दै अहिले रुचिको काम गर्न थालेको बताउँछन् । गजेन्द्रले यसअघि दस वर्षसम्म अङ्ग्रेजी विषय अध्यापन गरेका थिए । उनले घरमा ढोल, झ्याम्टा, घिउपाते, सारंगी, मादल, मुरली, बाँसुरी, मुर्चुंगा, बिनायो लगायतका पौराणिक बाजागाजा लगायतका उपकरण संग्रह गरेका छन् ।

उनकै पहलमा जेभाले हुक्मा डाँडा क्षेत्र पर्यटकीय गन्तव्य बनेको बताइन्छ । गजेन्द्रले सामाजिक सञ्जालमार्फत आह्वान गरेर जुटाएको दस लाख रुपैयाँ खर्चेर चट्टानी पहाडका ढुङ्गा कुँदेर बाटिका निर्माण गराएका हुन् । जेभालेदेखि हुक्मा डाँडा जान फिदिम नगरपालिकाले पदमार्गसमेत निर्माण गरिदिएको छ । २०७४ को तिहारमा उनकै नेतृत्वमा देउसी खेलेर निर्माण गरिएको जेभालेको खेल मैदानमा प्रत्येक शनिबार ठुल्ठूला फुटबल प्रतियोगिता हुने गरेका छन् । यस खेल मैदानको स्तरोन्नति गर्न पछिल्लो समय प्रदेश सरकारले लगानी गरेको बताइएको छ । जेभाले

नजिकै रहेको महादेव गुप्तेश्वर मन्दिरसम्म जाने सिँढी मार्ग र विश्रामस्थल सहितका संरचना बनाउन अमेरिका बस्दै आएका नारद रिमालका सन्ततिले लगानी गरेका छन् । यी सबै संरचनाको संरक्षणसँगै आन्तरिक पर्यटन प्रवर्धनमा गजेन्द्रले खेलेको भूमिका अविस्मरणीय रहेको फिदिमवासीको भनाइ छ । गजेन्द्रले सुरु गरेको साङ्गीतिक अभियानले लोप हुनै लागेका लोकबाजा र लयको संरक्षणमा पनि टेवा पुगेको सांस्कृतिकप्रेमीहरु बताउँछन् ।

# प्रहरी गतिविधि : विदेश पठाइ दिन्छु भन्दै ठगी गर्ने पक्राउ

काठमाडौं । ग्रीन कार्डको प्रलोभनमा पारी मौरिसस पुऱ्याई मानब बेचबिखन गरेको अभियोगमा झापा कमल गाउँपालिका-१ घर भएका ५४ वर्षीय बुद्धिराज न्यौपानेलाई सोमबार प्रहरीले पक्राउ गरेको छ । पीडित गत असार २० गते नेपाल फर्किई उजुरी दिएपश्चात मानव बेचबिखन अनुसन्धान ब्यूरो बबरमहलबाट खटिएको प्रहरीले उनलाई काठमाडौं गोकर्णेश्वर नगरपालिका-७ गौरीघाटबाट पक्राउ गरेको हो । न्यौपानेले मासिक ७० हजार रूपैयाँ तलबमा कुकको काममा लगाइदिने तथा काम गरेको केही समयपछि ग्रिन कार्ड समेत पाइने भनि प्रलोभन देखाई २ लाख ५० हजार रूपैयाँ लिई २०८० मंसिर १३ गते नेपालबाट भारतको नयाँ दिल्ली हुँदै मौरिसस पुऱ्याई मौरिसियन नागरिकको जिम्मा लगाई दैनिक १७/१८ घण्टा घरको काम लगाई समयमा खाना खान र तलबसमेत नदिई चरम श्रम शोषण तथा यौन शोषण गरेको अनुसन्धानबाट खुल्न आएको छ ।

उनी उपर मानव बेचबिखन तथा ओसार पसार मुद्दामा काठमाडौं जिल्ला अदालतबाट ५ दिन म्याद थप अनुमति लिई यस सम्बन्धमा प्रहरीले आवश्यक अनुसन्धान गरिरहेको छ ।

त्यस्तै कास्कीबाट धारिलो हतियार देखाई सुनको सिक्री र नगद लुटपाटमा संलग्न रहेको अभियोगमा ५ जनालाई प्रहरीले पक्राउ गरेको छ । पक्राउ पर्नेहरूमा पोखरा महानगरपालिका-१८ बस्ने ३७ वर्षीय देवन गुरूङ, सोही ठाउँ बस्ने १९ वर्षीय आजित रूचाल भन्ने हितमान सार्की, सोही महानगरपालिका-५ बस्ने तनहुँ ब्यास नगरपालिका-३ घर भएका १८ वर्षीय किशोर, पोखरा महानगरपालिका-४ गणेशटोलस्थित बिकास सुनचाँदी पसलका संचालक नारायण प्रसाद विक र एसपि मान्मा ज्वलेर्सका संचालक प्रशान्त मान्मा रहेका छन् ।

पोखरा महानगरपालिका-६ लेकसाईडस्थित बाटोमा हिँडिरहेकी २० वर्षीया महिलाको २ तोला बराबरको सुनको सिक्री १ थान, नगद १२ हजार रूपैयाँ र ज्याकेट आइतवार स्कुटर र मोटरसाइकलमा आएका अपरिचित व्यक्तिहरूले चक्कु देखाई डर त्रासमा पारी लुटी फरार रहेको भन्ने सूचना प्राप्त हुनासाथ वडा प्रहरी कार्यालय बैदामबाट खटिएको प्रहरीले घटनामा संलग्न आजित, हितमान र १८ वर्षीय किशोरलाई सिक्री बेचेर आएको नगद १ लाख ३ हजार ५ सय रूपैयाँ, घटनामा प्रयोग भएको ग.८ प ६९२४ नम्बरको स्कुटर र ग.११ प ९८२७ नम्बरको मोटरसाइकल सहित पक्राउ गरेको हो । साथै थप अनुसन्धानको क्रममा नारायण प्रसाद र प्रशान्तले सुनको सिक्री खरिद गरेको खुल्न आएपछि उनीहरूलाई समेत प्रहरीले पक्राउ गरेको हो ।

उनीहरू उपर जिल्ला अदालत कास्कीबाट चोरी तथा डाँका सम्बन्धी मुद्दामा ५ दिन म्याद थप अनुमति लिई यस सम्बन्धमा प्रहरीले आवश्यक अनुसन्धान गरिरहेको छ ।

त्यस्तै गरी वैदेशिक रोजगारमा पोर्चुगल पठाइदिन्छु भन्दै रकम ठगी गरेको अभियोगमा काठमाडौं महानगरपालिका-३१ बानेश्वर बस्ने कैलाली गोदावरी नगरपालिका-२ घर भएकी २७ वर्षीया दीपा चन्दलाई आइतबार प्रहरीले पक्राउ गरेको छ । दीपाले आकर्षक तलबको प्रलोभनमा पारी पोर्चुगल पठाइदिन्छु भन्दै १ जना पीडितबाट ५ लाख ३५ हजार रूपैयाँ लिई सम्पर्क विहीन भएको भन्ने उजुरीका आधारमा काठमाडौं उपत्यका अपराध अनुसन्धान कार्यालय टेकुबाट खटिएको प्रहरीले उनलाई भक्तपुर ठिमीबाट पक्राउ गरेको हो । उनलाई आवश्यक अनुसन्धान तथा कारबाहीको लागि वैदेशिक रोजगार विभाग ताहाचल काठमाडौं पठाइएको छ ।

त्यस्तै काठमाडौं महानगरपालिका-२६ पवित्रनगरबाट अवैध लागूऔषध ब्राउनसुगर जस्तो देखिने पदार्थ ६ ग्राम सहित नागर्जुन नगरपालिका-७ घर भएका ३५ वर्षीय मणिराज गिरीलाई सोमबार दिउँसो प्रहरीले पक्राउ गरेको छ । प्रहरी प्रभाग गोंगबुबाट खटिएको प्रहरीले उनलाई उक्त पदार्थ सहित पक्राउ गरेको हो ।

यसैगरी काठमाडौं, गोकर्णेश्वर नगरपालिका-७शिबचोकबाट नियन्त्रित लागूऔषध ट्रमाडोल २ हजार ४ सय ट्याब्लेट र नगद २९ हजार ८ सय रूपैयाँ सहित २ जनालाई सोमबार राति प्रहरीले पक्राउ गरेको छ । पक्राउ पर्नेहरूमा गोकर्णेश्वर नगरपालिका-७ दक्षिणढोका बस्ने मकवानपुर टिस्टुङ पालुङ घर भएका २६ वर्षीय समिर लामा र काठमाडौं महानगरपालिका-३२ जडिबुटी बस्ने नुवाकोट घर भएका २४ वर्षीय सिजन श्रेष्ठ रहेका छन् । प्रहरी बिट अर्यालगाँउबाट खटिएको प्रहरीले उनीहरूलाई उक्त लागूऔषध सहित पक्राउ गरेको हो ।

यसैगरी काठमाडौं, चन्द्रागिरी नगरपालिका-२ नागढुङ्गास्थित चेक प्वाइन्टबाट नियन्त्रित लागूऔषध नाइट्राभेट १ सय ५८ ट्याब्लेट सहित भारत बेतिया टाउन थाना-१० बस्ने २४ वर्षीय मोहम्मद अलबाजलाई मंगलबार बिहान प्रहरीले पक्राउ गरेको छ । प्रभाग नागढुंगा र लागू औषध नियन्त्रण ब्यूरो शाखा कार्यालय नागढुङ्गाबाट खटिएको प्रहरीले वीरगंजबाट काठमाडौंतर्फ आउँदै गरेको बा.प्र.०३-००१ ख २६६६ नम्बरको बसमा सवार उनलाई उक्त पदार्थसहित पक्राउ गरेको हो ।

त्यस्तै बाँकेको नेपालगंज उपमहानगरपालिका-१५ जमुनाह चेकपोष्टबाट अवैध लागूऔषध ब्राउनसुगर जस्तो देखिने पदार्थ १ ग्राम ७ सय ५० मिलिग्राम सहित मुगु छायाँनाथ गाउँपालिका-११ बस्ने २० वर्षीय चन्द्र बहादुर साउदलाई सोमबार दिउँसो प्रहरीले पक्राउ गरेको छ । इलाका प्रहरी कार्यालय जमुनाह र लागूऔषध नियन्त्रण ब्यूरो बाँकेबाट खटिएको प्रहरीले भारतबाट नेपालतर्फ आउँदै गरेका उनलाई उक्त पदार्थ सहित पक्राउ गरेको हो ।

त्यस्तै धनकुटाको साँगुरीगढी गाउँपालिका-६ भेडेटार चोकबाट अवैध लागूऔषध गाँजा ७ सय ३६ किलो सहित पाखीबास नगरपालिका-१० बस्ने २६ वर्षीय सुजन भन्ने टंक बहादुर मगरलाई सोमबार दिउँसो प्रहरीले पक्राउ गरेको छ । इलाका प्रहरी कार्यालय भेडेटारबाट खटिएको प्रहरीले धनकुटाबाट धरानतर्फ जाँदै गरेको ना.८ ख १२६८ नम्बरको ट्रकलाई जाँच गर्ने क्रममा उक्त परिमाणको गाँजा फेला पारी चालक टंक बहादुरलाई पक्राउ गरेको हो ।

# संसारको सबैभन्दा विषालु माछा कुन हो?

एजेन्सी । कुन माछाको विष साइनाइड भन्दा घातक छ ? यसको जवाफमा स्टोन फिसको नाम आउँछ । यो ढुङ्गा जस्तो माछालाई कसैले छोयो भने पनि उसको ज्यान जाने खतरा हुन्छ । ढुङ्गा जस्तो देखिने भएकाले मानिसले यसलाई चिन्न नसक्ने र यसको सिकार बन्ने गरेका छन् । कुनै पनि जीव यसको सम्पर्कमा आउने बित्तिकै शरीरबाट निस्कने विषका कारण मर्छ । अकस्मात पाइला टेक्यो भने पनि मृत्यु निश्चित छ । वास्तवमा ढुङ्गाको माछाको शरीरबाट न्यूरोटोक्सिन नामक विष बाहिर निस्कन्छ, जुन मानिसको मृत्युको कारण बन्छ ।

विषको एक थोपा पनि साइनाइड भन्दा घातक हुन्छ

विज्ञहरुका अनुसार यो माछाको विषको सम्पर्कमा आएमा मृत्यु निश्चित छ । यसबाट बच्ने एउटै उपाय भनेको जतिसक्दो चाँडो विषको सम्पर्कमा आएको क्षेत्र काट्नु हो । यसको विषको गति पनि धेरै तेज छ । यसको विष मात्र ०.५ सेकेन्डमा बाहिर निस्कन थाल्छ । सहरको पिउने पानीमा स्टोनफिशको विषको एक थोपा मिसियो भने पूरै सहर नष्ट हुन सक्छ ।

# एएफसी च्यालेन्ज लिग- चर्च ब्वाइजलाई हराउदै पारो समूह चरणमा

काठमाडौं । भुटानको पारो एफसी एएफसी च्यालेन्ज लिग समूह चरणका लागि छनोट भएको छ । दशरथ रंगशालामा मंगलवार नेपालको चर्च ब्वाइज युनाइटेडलाई २-१ ले हराउँदै पारो समूह चरणमा पुगेको हो ।

पारोको जितमा किंगा वाङचुक र विलियम ओकोपोले गोल गरे । लाकेन लिम्बुको गोल सान्त्वना गोलमा सिमित बन्यो । खेलको ३९औं मिनेटमा चर्च ब्वाइजले अग्रता बनायो। मोजेजको हेडर पासमा क्लोज रेन्जबाट लाकेन लिम्बुको ट्याप इन गोलमा परिणत भयो। तर यो अग्रता एक मिनेट पनि टिक्न सकेन ।

गोल भएर रिलिज भएकै बलमा चर्च ब्वाइजका दीप कार्कीले मिस गरेको बलमा किंगा वाङचुकले खाली पोष्टमा गोल गरे। पहिले हाफ एक-एक गोलको बराबरीमा सकियो । खेलको ६७औं मिनेटमा पारोले घरेलु टोली विरूद्ध अग्रता बनायो। पारोका गोलकिपर मिलोस क्युपिकले दिएको लामो पासमा विलियम ओकोपोले बक्सको एजबाट हानेको प्रहार गोलमा परिणत भयो । पारोले खेलमा दुई शुन्यको अग्रता बनायो ।

यसअघि खेलको १०औं मिनेटमा पारोका विलियम ओपोकुको प्रहार पोलमा लागेर फर्किएपछि काउन्टर एटयाकमा चर्च ब्वाइजका एरिक बिष्टले बक्सबाट हानेको प्रहार बाहिरियो । यसपछि १८औं मिनेटमा पारोले पाएको मौकालाई सदुपयोग गर्न सकेन भने सोही मुभमा गोल पनि भएको थियो। तर सहायक रेफ्रीले अफ साइडको झन्डा उठाइदिए। खेलको ३०औं मिनेटमा पारोले गोल गर्ने राम्रो मौका गुमायो। बक्सको लाइनबाट केशुके होन्डाले हानेको प्रहार पोलमा लागेर फर्कियो ।

दोस्रो हाफको सुरूवातमा नै चर्च ब्वाइजले पाएको राम्रो मौका गुमायो। यसपछि खेलको ५६औं मिनेटमा आयुष घलानको पासमा चर्च ब्वाइका सनिश श्रेष्ठको प्रहारलाई पारोका गोलकिपर मिलोस क्युपिकले मुस्किलले बचाए ।

खेलको ८२औं मिनेटमा चर्च ब्वाइजका सञ्जीव बिष्टले हानेको राम्रो प्रहारलाई किपरले उत्कृष्ट बचावट गरे। ८९औं मिनेटमा चर्च ब्वाइज फेरि चुक्यो। पिटर बान्डाको प्रहार आकाशियो। यसपछि खेलमा थप गोल हुन सकेन र पारोले घरेलु टोलीलाई स्तब्ध पार्यो । दशरथ रङ्गशालाको हिल्लामे मैदानमा भएको खेलमा भुटानको लिग च्याम्पियन पारो फुटबल क्लब एसियाको स्टार केशुके होन्डाको कप्तानीमा उत्रिएको थियो। खेल सुरू हुनुभन्दा केहि समय अगाडि परेको मुसलधारे वर्षाले खेल मैदान हिल्लामे बन्यो। बल गुडने गतिलाई अन्दाज गर्न समेत खेलाडीलाई कठिन परेको थियो। गत वर्ष मछिन्द्रसँग भोगेको हारको बदला पारोले यो पटक चर्च ब्वाइजसँग लिएको छ ।

## विश्व.......

नसकेको स्वीकार गर्दै महासंघले अघि सारेको विशेष, संरक्षित र स्वायत्त क्षेत्रलाई कानुन बनाएर सम्बोधन गरिने धारणा राखे ।

२०७२ सालको संविधानले जनतालाई सार्वभौम बनाएको बताउँदै जनताको माँग र आवश्यकतालाई विधि र प्रक्रियाबाट मात्र सम्बोधन गर्न सकिने प्रष्ट्याए । संसदमा रहेको दुइ दल बीचको सहमति पश्चात बनेको सरकारले जनताको अधिकार फिर्ता लिने नसोचेको बताउँदै बहुभाषि, बहुजातिय र बहुसाँस्कृतिक मुलकको विशेषतालाई कसैले मेट्न नसक्ने धारणा राखे ।

आदिवासी जनाजातिका सवालहरुलाई संविधान सभाले अभिलेखिकरण गरेको र त्यसलाई सबैले ग्रहण गरेको बताउँदै उनले गुणस्तरीय जीवनको सपना देख्ने वातावरण यही संविधानले दिएको दावी गरे । उपप्रधानमन्त्री सिंहले अधिकार माँग्दा अधिकार गुम्ने पनि खतरा रहन्छ भन्दै लोकतन्त्रको रक्षाका लागि सर्तक रहन पनि सो अवसरमा अपील गरे । सोही कार्यक्रममा नेपाल आदिवासी जनजाति महासंघका वरिष्ठ उपाध्यक्ष बुद्ध घर्ती भूजेलले स्वागत मन्तव्यका क्रममा आदिवासी जनजातिप्रति राज्य असहिष्णु बनेको टिप्पणी गरे । विकासका नाममा आदिवासीलाई घरबारविहिन बनाउने, भूमि र भूभाग तथा आदिवासीले प्रयोग गरिरहेको स्रोतको दोहन गर्ने काममा मात्र अघि बढेको आरोप लगाए ।

आदिवासीहरुको मौलिक ज्ञान र सीप, प्रथाजन्य परम्परालाई जगेर्ना गर्नु पर्नेमा उनीहरुको मूल्य र मान्यता माथि हस्तक्षेपकारी क्रियाकलाप हावी भएको भन्दै सोको प्रतिकार गर्ने बताए । नेपाल आदिवासी जनजाति महिला महासंघकी अध्यक्ष डिमी शेर्पाले जलवायु परिवर्तनका कारण नेपालका महिलाहरु सबैभन्दा बढी पीडित रहेको बताउँदै राज्यका नीति, कार्यक्रम र कानूनहरुमा आदिवासी महिलालाई सम्बोधन नगरेको बताए ।

अर्का वक्ता किरात राई यायोक्खाका अध्यक्ष जीवन हाताचो राईले आदिवासीहरुले पहिचानका लागि आवाज उठाउँदा सरकार प्रमूखले 'आतंकाकारी' को आरोप लगाएको भनाईप्रति आपत्ति जनाउँदै कोशी प्रदेशका ८२ जना र केन्द्रका ३ जना नेता तथा साँसदका सार्वजनिक कार्यक्रम बहिस्कार गर्ने नीति आदिवासीले लिएको बताए ।

आदिवासी जनजाति आयोगका अध्यक्ष रामबहादुर थापा मगरले समानुपातिक व्यबस्था आदिवासीको संघर्षबाट आएको बताउँदै यो व्यबस्थालाई घटाउन नसकिने बताए । कार्यक्रममा विभिन्न जातीय संस्थाका तर्फबाट मौलिक जातीय झाँकी तथा नृत्यहरु कार्यक्रममा प्रस्तुत गरिएको थियो ।

यस अघि भृकुटीमण्डपबाट सुरु भएको साँस्कृतिक र्‍याली सहितको झाँकीले शहर परिक्रमा गरी प्रज्ञा प्रतिष्ठानको सभाहलमा पुगेको थियो । र्‍यालीमा विभिन्न जातीय संस्थाहरुले संविधानमा व्यबस्था भएका अधिकारको कार्यन्वयन गर्नु पर्ने, भाषिक अधिकारको प्रत्याभूति गरिनु पर्ने, जातीय विभेद अन्त्य हुनु पर्ने लगायतका नारा लेखिएको प्लेकार्डहरु प्रदर्शन गरिएका थिए ।

त्यस्तै नेपाल आदिवासी जनजाति पत्रकार महासंघ स्थापनाको रजत बर्षका अवसरमा आइतबार राजधानीमा एक विशेष समारोहको आयोजना गरी पाँच जना आदिवासी जनजाति पत्रकारलाई र एक मातृभाषामा प्रकाशन हुने पत्रिकालाई सम्मान र पुरस्कार प्रदान गरेको छ । फोनिज राष्ट्रिय पुरस्कार प्राप्त गर्नेहरुमा छापा पत्रकारिता तर्फ प्रभाव राष्ट्रिय दैनिकका सम्पादक विष्णु तामाङ, रेडियो तर्फ गोर्खाली रेडियोकी स्टेशन म्यानेजर खिमा गुरुङ र इलामका पत्रकार सटेन्द्र जबेगू छन् ।

यसै गरी राष्ट्रिय पत्रकारिता सम्मानबाट विजयरत्न तुलाधर, र नेपाल टेलिभिजनका पुष्पहरी क्याम्पा राई सम्मानित भएका छ । फोनिज मातृभाषा पत्रकारिताबाट दाङबाट प्रकासित हुने साप्ताहिक पत्रिका लौव अग्रासन रहेको छ । सो पत्रिकाका सम्पादक सन्तोष दहितले सम्मान ग्रहण गरे । सो फोनिज राष्टिय पत्रकारिता सम्मानको नगद २५ हजार र फोनिज राष्ट्रिय पत्रकारिता पुरस्कारमा २० हजार नगद र प्रमाणपत्र रहेको छ ।

सोहीअनुसार फोनिज मलेसिया सम्मान २०८१ बाट दुई जना पत्रकार सम्मानित भएका छन् । सम्मानित हुनेमा नेपाल पत्रकार महासंघ पाल्पाका अध्यक्ष रेखीराम रानामगर र पर्साका पत्रकार पुनम महतो थारु छन् । सम्मानपत्रसहित नगद १० हजार राशीको सो सम्मान यसै वर्ष स्थापना गरिएको हो । फोनिज मलेसियाले सो पुरस्कारको स्थापना गरेको हो ।

सो पुरस्कार र सम्मान सञ्चार तथा सूचना प्रविधि मन्त्री पृथ्वीसुव्वा गुरुङले बितरण गरेको थियो । कार्यक्रमलाई सम्बोधन गर्दै सञ्चार तथा सूचना प्रविधि मन्त्री गुरुङले प्राप्त उपलब्धिमा उभिएर त्यसको रक्षा गर्न आह्वान गरे । उनले संघीय लोकतान्त्रिक गणतन्त्रात्मक संविधान नै पछिल्लो समयमा आदिवासी जनजातिको सबैभन्दा ठूलो उपलब्धि भएको दावी गरे । सरकारका प्रवक्ता समेत रहेका मन्त्री गुरुङले अबको एक वर्षभित्र सबै सरकारी मिडियामा नयाँ नीति ल्याइने बताए ।

उनले भने, "यो एक वर्षभित्र सबैमा नयाँ नीति बनाइन्छ । संघीय लोकतान्त्रिक गणतन्त्रात्मक संरचनाअनुरुपको नीति बनाइन्छ । प्रेस काउन्सिल नेपालका अध्यक्ष बालकृष्ण बस्नेतले शुभकामना मन्तव्य दिदै समाजिक तथा राजनीतिक आन्दोलनमा फोनिजले सहयोगी भूमिका निर्वाह गरेको बताए । उनले परिपक्व पत्रकारिता हराउँदै गएको बताउँदै फोनिजमा पनि वास्तविक पत्रकारको सङ्ख्या वृद्धि हुनुपर्ने बताए ।

नेपाल आदिबासी जनजाति महासंघका अध्यक्ष गेल्जे लामा शेर्पाले पत्रकार मात्र नभई धेरै नेपाली पेशाबाट पलायन हुने अवस्था नेपालमा भएको बताए । यहाँका उद्योग, कलकारखाना सबल नभएसम्म पत्रकारिता क्षेत्र पनि सबल नहुने उनको भनाइ छ । नेपालमा जलविद्युत र पर्यटन क्षेत्रको विकास गर्न सके अरु विकास स्वतः हुने धारणा व्यक्त गरे ।

कार्यक्रममा नेपाल आदिबासी जनजाति आयोगका अध्यक्ष रामबहादुर थापामगर, नेपाल पत्रकार महासंघका अध्यक्ष विपुल पोखरेल, फोनिजका पूर्व अध्यक्ष खिम घले, डण्ड गुरुङ, फोनिजका संस्थापक अध्यक्ष चन्द्रसिंह कुलुङ, प्रेस चौतारी नेपालका उपाध्यक्ष सविन प्रियसन, नेपाल प्रेस युनियनका महासचिव दिलिप पौडेल, प्रेस सेन्टर नेपालका महासचिव सन्तोष पौडेल, फोनिजका वरिष्ठ उपाध्यक्ष लक्की चौधरी, सम्मानित व्यक्तित्वहरु विजयरत्न तुलाधर, खिमा गुरुङ, नेवा पत्रकार दवुका नृपेन्द्रलाल श्रेष्ठ लगायतले धारणा राखेको थियो ।

फोनिजका अध्यक्ष गजुरधन राईको अध्यक्षतामा भएको कार्यक्रममा उनले समावेशी मिडियाको मुद्दामा फोनिज सधैं एकजुट हुने प्रतिबद्धता जनाए ।

## अंग....

स्वास्थ्य जस्तो संवेदनशील क्षेत्रमा सेवारत सबै चिकित्सक र कर्मचारीप्रति सम्मान प्रकट गर्दै उहाँले अंगदान र अंग प्रत्यायोपनले स्वास्थ्य क्षेत्रमा सामाजिक क्रान्ति ल्याएको बताउनुभयो ।

उहाँले स्वास्थ्य बीमालाई रु. १ लाखबाट बढाएर पाँच लाख पुऱ्याउने योजना हालै सार्वजनिक गरेको बताउनुभयो ।

कार्यक्रमका विशेष अतिथि भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले नेपालमै अंग प्रत्यारोपणको सुविधा आरम्भले बिरामीहरुलाई विदेशमा गएर उपचार गराउनुपर्ने बाध्यताको अन्त्य भएको बताउनुभयो ।

अंगदानबारे सहज कानुन आवश्यक भएको बताउँदै उहाँले नागरिकहरुलाई अंगदानको लागि प्रोत्साहित गर्न समय समयमा जनचेतनामूलक कार्यक्रमहरुको आयोजना गरिनुपर्ने बताउनुभयो ।

सरकारी अस्पतालहरुमा पनि डाइलासिसको सेवा उपलब्ध भएमा बिरामीहरुलाई धेरै राहत मिल्ने बताउँदै उहाँले सरकारी अस्पताललाई विश्वसनीय र भरपर्दो बनाउनु आवश्यक छ भन्नुभयो ।

स्वास्थ्य क्षेत्र जनताको सेवा गर्ने उपयुक्त माध्यम हो भन्दै उहाँले स्वास्थ्य बीमालाई प्रभावकारी ढंगले सञ्चालन गरे धेरै बिरामीहरु यसबाट लाभान्वित हुने बताउनुभयो ।

भक्तपुर क्षेत्र नं. २ का सांसद दुर्लभ थापाले आफूले पनि अंगदान गर्ने घोषणा गर्दै नेपालमै अंग प्रत्यारोपण गर्ने सुविधाले बिरामीहरुलाई विदेशमा उपचार गर्न जाने बाध्यताको अन्त्य भएको बताउनुभयो ।

प्रदेश स्वास्थ्य मन्त्री किरण थापाले प्रादेशिक अस्पतालहरुमा पनि डाइलाइसिस सेवा सञ्चालन गर्न लागिरहेको बताउँदै भक्तपुरलाई शिक्षा र स्वास्थ्यको केन्द्र बनाउन सकिने धारणा राख्नुभयो ।

कार्यक्रमका सभापति शहीद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्रका कार्यकारी निर्देशक डा. पुकारचन्द्र श्रेष्ठले केन्द्र स्थापना भएको १२ वर्ष समयावधिमा करिब १३०० मिर्गौला प्रत्यारोपण र हालसम्म २६ जनाको कलेजो प्रत्यारोपण सफलताका साथ सम्पन्न भइसकेको जानकारी गराउनुभयो । अंग प्रत्यारोपण जस्तो संवेदनशील विषयलाई सातै प्रदेशमा विस्तार गर्न सके मात्र नेपाली बिरामीलाई राहत हुने बताउँदै उहाँले नेपालमा हालसम्म मस्तिष्क मृत्युपछि अंगदान गर्ने करिब २६०० जनाले मन्जुरीनामा दिइसकेको बताउनुभयो ।

कार्यक्रममा केन्द्रका चिकित्सक डाक्टर कल्पनाकुमारी श्रेष्ठ, अंगदाता दुर्गा ढकाल र अभियन्ता बासुदेव पौडेलले पनि बोल्नुभएको थियो ।

## थारु......

गराउँदा सङ्ख्या बढ्नुका साथै नेपाली बाहेकका विभिन्न भाषाभाषी नै टप टेनमा परेका छन् ।'

मातृभाषामै कविता लेख्ने कविहरू नै उम्दा भएको उनको भनाइ थियो । सङ्घीयताको कार्यान्वयनको क्रममा थारू समुदायबाट विद्रोह हुँदा तिनले ठुलो मूल्य चुकाउनु परेको स्मरण गर्दै उनले भने, मैले पनि टीकापुरबारे लेख र कविता लेखेर थारू समुदायप्रति सद्भाव जताएको छु ।

कार्यक्रममा विभिन्न क्षेत्रमा विशेष योगदान पुर्याउने बुद्धसेन चौधरी, मानबहादुर चौधरी पन्ना, सिताराम चौधरी, बलराम चौधरी र नन्दुराज चौधरीलाई प्रमुख अतिथि राईले कदरपत्र प्रदान गरेको थियो । उनले संस्थागत योगदान पुर्याउने बर्दियाली थारू विकास मञ्च काठमाडौं र न्यु जर्सी थारू कम्युनिटी संयुक्त राज्य अमेरिकालाई समेत कदरपत्र प्रदान गरेको थियो । सम्मानित व्यक्तित्व सिताराम चौधरी र बुद्धसेन चौधरीले आआफ्नो मन्तव्य राखेको थियो । थारू कवितामा महिला हस्ताक्षर नामक कार्यपत्र प्रस्तुत गर्दै भूमिका थारूले थारू भाषामा महिला कविता लेखनको स्थिति र सम्भावनाबारे उल्लेख गरेको थियो । यस कार्यपत्रमाथि शान्ति चौधरीले टिप्पणी गर्दै थारू भाषासाहित्यको खोजअनुसन्धानमा थप जोड दिनुपर्ने बताए ।

सहभागीका तर्फबाट पुरुषोतम चौधरी ,नरेन्द्रकुमार चौधरी, इन्दु थारू, प्रणव चौधरी, सियाराम चौधरी र सन्तोषी चौधरीले जिज्ञासा तथा सुझाव राखेको थियो । सहभागीका टिप्पणी र जिज्ञासालाई शान्त पार्दै प्रस्तोता भूमिका थारूले प्राप्त भएका सुझावका आधारमा आफूले कार्यपत्रलाई पूर्णता दिन कोसिस गर्ने बताए ।

कार्यक्रममा अरूण चौधरी, गणेश वर्तमान, प्रणव चौधरी, शिव चौधरी, मित्थु थारु, अर्णव चौधरी, सन्तोषी चौधरी, सीएन थारु, निरजबाबु चौधरी, दोषहरण चौधरी, श्रीसन चौधरी, अविनाश चौधरी, शान्ति चौधरी, शत्रुघन चौधरी, भीमेश चौधरी, रामस्वागत चौधरी, उदयनारायण चौधरी र दिलबहादुर कुश्मी लगायतले कविता वाचन गरेको थियो ।

कार्यक्रमका सभाध्यक्ष ,नेपाल प्रज्ञा प्रतिष्ठानका प्राज्ञसभा सदस्य तथा थारू लेखक सङ्घ नेपालका अध्यक्ष डा. कृष्णराज सर्वहारीले वाचित रचनाको दस्तावेजीकरण गरिनुपर्ने कुरामा जोड दिँदै धन्यवाद ज्ञापनसहित कार्यक्रमको समापन गरेको थियो । प्रज्ञा प्रतिष्ठानका प्राज्ञसभा सदस्य चेतनाथ धमलाबाट उक्त कार्यक्रम बारे जानकारी प्राप्त भएको थियो । कार्यक्रमको औचित्यमाथि प्रकाश पार्दै थारू लेखक सङ्घका नन्दुराज चौधरीले ठुम्रार साहित्यिक बखेरी सुरु गरेको १२ वर्षपछि प्रज्ञाको सहकार्यमा प्रज्ञामै कार्यक्रम गर्न पाएकोमा खुसी व्यक्त गर्दै स्वागत मनतव्य राखेको थियो । कार्यक्रमको सञ्चालन यस सङ्घका आजीवन सदस्य शत्रुघन चौधरीले गरेको थियो ।

## अव्यवस्थित......

उनले बताए । प्रत्येक वर्ष सूर्यविनायकको राममन्दिर र शान्ति निकेतन स्कूल डुब्दा पनि समस्या समाधानमा पहल नगरिएको उनले गुनासो गरे । आफ्नो पार्टी सम्बद्ध जनप्रतिनिधिलाई थप जिम्मेवार बनाइ जिल्लामा प्राकृतिक प्रकोप न्यूनीकरणका लागि थप पहल गर्ने उनले प्रतिवद्धता पनि प्रकट गरेका छन् ।

त्यसैगरी नेकपा(माओवादी केन्द्र)का अध्यक्ष सुनिल गोठे बासुले कम्तिमा १२ वर्षको लागि योजना बनाउनुपर्नेमा वर्षा बित्न नपाउँदै डुबान बिर्सिने र खोला छेउमा टहरा बनाउन शुरु गरिहाल्ने प्रवृत्ति प्रति चिन्ता व्यक्त गरे । एकातिर जनता घुस ख्वाएर नक्सा पास गर्न खोज्ने अर्कोतिर स्थानीय सरकार डुबान केन्द्रीत मापदण्ड बनाउन र लागू गर्न असमर्थ हुने अवस्था रहुन्जेल समस्या समाधान नहुने उनको भनाइ छ ।

चाँगुनारायण र सूर्यविनायकका जंगल हुँदै आउने बाढीले भक्तपुर र मध्यपुर थिमिमा बितण्डा मच्चाउने गरेकोले ४ वटै नगरपालिका मिलेर दीर्घकालीन समाधान खोज्नुपर्ने उनले बताए ।

सो अवसरमा रास्वपाका सभापति रामेश्वर थापाले स्थानीय जनप्रतिनिधिहरु लापरवाह भएकोले समस्या भएको बताए । उनले आफ्नै घर रहेको सूनपा-७ गुन्डुमा भएको एक प्लटिङ्गले २० फुटको खोला ५ फुटको बनाईदिएको खुलासा गर्दै प्रायजसो प्लटिङ्ग व्यवसायीले कुनै मापदण्ड पुरा नगर्ने र उनीहरुको अगाडी जनप्रतिनिधि लाचार देखिने गरेका दावी गरे ।

ग्लोबल वार्मिंगका कारण वर्षामा पानी अझ बढी पर्दै जाने भन्दै उनले बाढी व्यवस्थापन गर्न सामुहिक पहलको आवश्यकता समेत औंल्याए ।

त्यसैगरी जसपाका जिल्ला अध्यक्ष राजाराम ढुकुछुले वर्षा शुरु हुनु अगावै नदी र निकासको अवस्था जांच गरी आवश्यक प्रवन्ध मिलाउनुपर्नेमा जोड दिए । खोला, खोल्सा र कुलेसा बर्षैपिच्छे गहिर्याउनुपर्ने उनको भनाइ छ ।

नदी चौडा बनाई करिडोर निर्माण मात्र पनि समस्याको समाधान नभएको भन्दै जसरी बिगतका बाटाहरु साँघुरा लाग्न थाले त्यसरी नै बाढीको बहाव बढ्दै जाँदा करिडोरले पनि काम नगर्ने उनको दावी छ । नदी गहिर्याउनु नै उत्तम बिकल्प हुने उनले बताए ।

## म्ये प्वा......

खनेगु जात्रा' मनाईन्छ । यसवर्ष यो जात्रा आगामी असोज २ गते बुधवार मनाईन्छ ।

जात्रामा जिब्रो छेडाउनको लागि उनले मध्यपुर थिमि नगरपालिकाका नगरप्रमुख सुरेन्द्र श्रेष्ठलाई साथमा लिएर शनिवार रामभक्त नकर्मी कहाँ गएर नातु (जिब्रो छेड्ने सुइरो) बनाउन आग्रह गरेको छ । जात्राको परम्परा अनुसार जिब्रो छेडाउने व्यक्तिले एक महिना अघि नकर्मीलाई नातु बनाउन आग्रह गर्नुपर्छ, त्यसका लागि जिब्रो छेडाउने व्यक्तिले पुजा सामग्रीका साथ सम्ये बजी र एउटा रातो भाले लिएर नकर्मीको घरमा जानुपर्छ । सोही अनुसार शनिवार नगरप्रमुखसहितको टोली लिएर नकर्मीलाई नातु बनाउन आग्रह गरेको हो ।

जिब्रो छेडाउने व्यक्तिको आग्रह अनुसार नकर्मीले नातु तयार गरी शुद्ध तोरीको तेलमा डुबाएर राख्ने प्रचलन रहेको छ । यसरी राखेको सियोले जिब्रो छेड्दा रगत नआउने जनविश्वास रहेको छ ।

मध्यपुर थिमिमा वर्षेनी दुई वटा मेय् प्वाः खनेगु जात्रा (जिब्रो छेड्ने जात्रा) सञ्चालन हुने गरेको छ । पहिलो बिस्काः जात्राको अवसरमा प्रत्येक वर्ष बैशाख २ गते दिउँसो थिमिको बोदेमा र दोस्रो ईन्द्रजात्राको अवसरमा आश्विन शुक्ल पुर्णिमाको साँझ थिमिको दिगुलीमा जिब्रो छेड्ने जात्रा सञ्चालन हुने गरेको छ ।

थिमिको जिब्रो छेड्ने जात्राको लागि जात्राको आठ दिन अगाडि द्यः दुसालेगु अर्थात देवता भित्र्याउने चलन रहेको छ । त्यसको लागि बालकुमारी मन्दिरमा एघार वटा किसली चढाउनु पर्दछ र रातोभालेको वलि दिएर बालकुमारीको साधना गर्नुपर्दछ । जिब्रो छेड्ने जात्राको चारदिन अघि थिमिको लाय्कूका पःमाहरुले हनुमानढोका दरवारमा गएर राज खड्ग लिएर आउने र सो खड्गलाई जात्रामा डबलीमा राख्ने प्रचलनसमेत रहेको छ । ईन्द्रजात्राको दिन बालकुमारीमा रातो भालेको बलि सहितको पूजागरि छ्वयला भोज खुवाउने चलन रहेको छ ।

त्यसको भालिपल्ट येंया पुन्हीको दिनमा दुता नं (जामा) लगाएर बालकुमारीमा पूजा गर्ने परम्परा रहेको छ । यो दिन जिब्रो छेड्ने व्यक्ति मौन व्रत बस्नुपर्दछ । जिब्रो छेड्ने दिनमै बेलुकापख बालकुमारी देखि दिगुलीस्थित दिगुभैरव मन्दिर स्थानमा बत्ति दिन जानु पर्दछ । त्यहाँबाट आइसकेपछि दिगुभैरव मन्दिरमा भैरवको पूजा गरिन्छ । यो पूजा पश्चात जिब्रो छेड्ने व्यक्तिमा दैवी शक्ति प्राप्त हुने जनविश्वास रहेको छ । त्यहाँबाट जिब्रो छेड्नेलाई दुई जनाले समाई भैरवसामुन्ने मुख फर्काई उल्टो हिडाई डबलीमा पुऱ्याईन्छ ।

डवलीमा नकर्मीले बनाएको करिव १० इन्च लामो नातुबाट कमीनायोले जिब्रो छेडाउने काम हुन्छ । त्यसपछि भ्यं (महादिप) बोक्न लगाई उसको ईच्छा अनुसार नगरपरिक्रमा गराउने गर्दछ । यसरी जिब्रो छेड्ने व्यक्तिले नगरपरिक्रमा गर्दा स्थानीय व्यक्तिहरु पनि "ताकुँ भ्येः ख्वाःमसिसें भ्वय् नय्" भन्दै सँगसँगै नगरपरिक्रमा गर्दछ ।

गतवर्ष बालकराम नानीचा श्रेष्ठले जिब्रो छेडाएका थिए । जात्राको परम्परा अनुसार बालकरामको इच्छा बमोजिम काठमाण्डौंको पशुपतिनाथसम्मको यात्रा गरिएको थियो ।

जात्राको समापन बालकुमारी परिसरमा गरिन्छ । त्यहाँ जिब्रोबाट नातु निकालेर जिब्रोमा भएको खालमा नासःद्यः (नित्यनाथ) देवता परिसरको माटो राखिदिन्छ । अनि नातुलाई बालकुमारी मन्दिर भित्र ठोकिन्छ । त्यसपछि जिब्रो छेडाउने व्यक्ति घर पुगेर मान्यजनबाट सगुन लिन्छ । जात्राको भोलिपल्टको बिहान नातु पूजा भनि द्यःलित तवनेगु (विसर्जन पूजा) का लागि बालकुमारीमा पुजा गर्न जानुपर्ने प्रचलन रहेको छ ।

## पेशासँगै....

निःशुल्क तालिम प्रदान गर्दै आइरहेको संस्थाका निर्देशक बालकृष्ण वनमालाले बताए । उनले यो वर्ष मात्रै एसइई दिएर बसेका दुई सय ३८ जना पुरुष र एक सय ९२ जना महिला गरी कुल चार सय ६० जनालाई विभिन्न दसवटा तालिमहरु दिइएको जानकारी दिए । संस्थाले हालसम्म ६ हजार सात सय ८० जनालाई विभिन्न तालिमहरु प्रदान गरी सीपयुक्त बनाइएको वनमालाले बताए ।

## स्थापना दिवसमा रक्तदान कार्यक्रम




भक्तपुर । मध्यपुर थिमिको गठ्ठाघरचोक स्थित मध्यपुर बचत तथा ऋण सहकारी संस्था लि.को स्थापना दिवसको अवसर पारेर संस्थाले सामाजिक दायित्व अन्तर्गत प्रत्येक वर्ष झैं नियमित वृहत रक्तदान कार्यक्रम सम्पन्न गरेको छ । रक्त संचार केन्द्र भक्तपुरको प्राविधिक सहयोगमा सम्पन्न कार्यक्र ममा ३ महिलासहित १० जनाले रक्तदान गरेको संस्थाका अध्यक्ष महेश्वरमान श्रेष्ठले जानकारी दिए । त्यस्तै संस्थाले स्थापना दिवसको अवसरमा गठ्ठाघरचोकमा रहेको नवदुर्गा मन्दिरमा दिप प्रज्वलन गर्नुका साथै बृद्धाश्रममा रहेका बृद्धबृद्धाका लागि सहयोग पनि गरेको संस्थाका अध्यक्ष श्रेष्ठले जानकारी दिएको छ ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com

थिमि TIMES

# 'नरसिंहा: अवतार'बाट महानायक राजेश हमाल ८ वर्षपछि कमब्याक




काठमाडौं । निर्देशक दिवाकर भट्टराई निर्देशन गर्न लागेको आगामी फिल्म 'नरसिंहा: अवतार' यतिबेला चर्चाको विषय बनेको छ । यही फिल्मबाट महानायक राजेश हमाल ८ वर्षपछि कमब्याक गर्न लागेकाले पनि यो फिल्मका कारण फिल्म क्षेत्र गर्माएको छ ।

यही फिल्ममा नायिका निती शाह पनि अनुबन्धित भएकी छन् । निर्माणपक्षले नितीको एउटा लुक्स सार्वजनिक गरेको छ । सार्वजनिक लुक्समा नितीलाई महंगो पहिरन र महंगा गहनामा सजिएकी सुन्दरीका रुपमा देखाइएको छ । फिल्ममा उनको भूमिका के हुन्छ भन्ने निर्माण पक्षले अहिलेसम्म सस्पेन्स नै राखेको छ ।

नरसिंहाको अर्थ- भगवान विष्णुको उग्र अवतार हो। निर्माणपक्षले बिहिबार फिल्मको घोषणा गरिएसँगै थिम पोस्टर सार्वजनिक गरेको थियो । जहाँ, थिम पोस्टरले युद्धको सङ्केत गरेको छ । सार्वजनिक पोस्टरमा प्रयोग गरेको दायामा रातो (आगो) र दायातर्फ निलो समुद्रको रङले फिल्मको कथा युद्ध र शान्तिको हुने संकेत गरेको छ । शान्तिका लागि द्वन्द्व हुने थिम पोस्टरले संकेत गरेको यसले पनि फिल्म द्वन्द्वप्रधान हुने प्रष्ट छ । आगो र पानीले आफ्नो अस्तित्व एकै ठाउँमा रहेर जोगाउन सक्दैनन् । त्यसैले यो लडाईमा कसले जित्छ भन्ने हो । त्यसैले यसमा भरपुर एक्सन हुने अनुमान लगाउन सकिन्छ ।

क्रिएटिभ सिने आर्टको प्रस्तुति रहने फिल्म यही भदौबाट छायाङ्कनमा जाने तयारीमा रहेको छ । फिल्मको लगानी तीन करोडभन्दा माथि हुने बताइएको छ । निर्देशक भट्टराईको अर्को फिल्म 'मायावी' प्रदर्शनको तयारीमा छ ।

# नेवा: फिल्म 'तिब: द सपोर्ट' प्रदर्शन हुने




ललितपुर । ललितपुर महानगरपालिका १६ वडा कलाकार समितिले यही भाद्र १ गते शनिवार नेवा: (नेपालभाषा) को चलचित्र 'तिब: द सपोर्ट' प्रदर्शन गर्ने भएको छ । विहान ८:३० बजे र ११:३० बजे काठमाडौं जमलस्थित विश्वज्योति सिनेप्लेक्समा प्रदर्शन गरिने उक्त चलचित्र रवि सायिमले निर्देशन गरेको लोकप्रिय चलचित्र हो । नयाँ पुस्ताको विदेश मोहका कारण ज्येष्ठ नागरिकहरुको जीवनमा परेको प्रभावका विषय केन्द्रीत यो चलचित्रको हालसम्म १६ शो प्रदर्शन भएको छ भने लगातार हाउसफूल भइरहेको छ ।

सरजु रंजित र समिता रंजित श्रेष्ठले निर्माण गरेको यस चलचित्रमा छायाँकन तथा सम्पादन अमर चित्रकार, पार्श्व संगीत तथा संगीत भूपेन्द्र बज्राचार्यको रहेको छ । चलचित्रमा सुशील राजोपाध्याय, आशाकाजी थकु, संघरत्न शाक्य, सरस्वती मानन्धर, मैंया मुनिकार, सुनीता श्रेष्ठ, मनोज महर्जन, श्रृष्टि महर्जन, पुष्करभक्त माथेमा लगायत कलाकारहरुको अभिनय रहेको छ ।

कला र कलाकारिता क्षेत्रको लागि समर्पित भइ अग्रसर ललितपुर महानगरपालिका १६ वडा कलाकार समितिले आर्थिक सशक्तताका लागि यो शो आयोजना गरेको हो । वडाको नियमित सहयोगबाहेक पनि थप सशक्त कार्यक्रम गर्दै जाने उद्देश्यले आयोजित यस प्रदर्शनले नेपालभाषाको चलचित्र क्षेत्रसँग, कलाकारिता क्षेत्रमा थप उर्जाशील कार्यक्रम आयोजना मात्र नभइ टिकट विक्रीमा सघाउने संघसंस्थालाई पनि टेवा पुग्ने गरी व्यवस्था गरेको समितिका संयोजक बज्राचार्यले बताउनुभयो ।

कलाकार समितिले नेवा: संस्कृतिका महत्वपूर्व पर्वको अवसरमा विभिन्न सांस्कृतिक कार्यक्रम आयोजना गर्नुका साथै गीत तथा नृत्य प्रतियोगिता, कलाकार भेला, म्यूजिक भिडियो वर्कशप, 'ललित रत्न' सम्मान प्रदान गर्दै आएको छ ।

४ बर्ष अघि पहिलो पल्ट स्थानीय तहमा ललितपुर महानगरपालिका १६ वडामा वडा अध्यक्ष निर्मलरत्न शाक्यको अवधारणा अनुरुप कलाकार समिति स्थापना भएको हो । हाल अन्य वडाहरुमा समेत कलाकार समिति स्थापनाको अभियान चलेको छ ।

# शेख हसिनाले इन्डियन फिल्ममाथिको प्रतिबन्ध हटाएकी थिइन

एजेन्सी । शेख हसिनाले प्रधानमन्त्री पदबाट राजीनामा दिएपछि बंगलादेश यतिबेला चर्चामा छ । नेतृ हसिना बंगलादेशमा हिन्दी फिल्म रिलिजको बाटो खोल्ने व्यक्ति हुन् । बंगलादेशले सन् १९७१ मा भारतीय फिल्मको प्रदर्शनमा प्रतिबन्ध लगाएको थियो । हसिनाले सन् २०२३ मा यो प्रतिबन्ध हटाएकी थिइन् । किनभने त्यहाँको फिल्म उद्योग निकै कमजोर अवस्थामा थियो । शाहरुख खानको फिल्म 'पठान' प्रतिबन्ध हटेको ५१ वर्षपछि बंगलादेशमा रिलिज भएको पहिलो भारतीय फिल्म हो ।

बंगलादेशी फिल्म उद्योगको कुरा गर्दा यसलाई ढलिउड पनि भनिन्छ । यस फिल्म उद्योगको राजधानी ढाका हो । भारतमा हरेक वर्ष औसत दुई हजार फिल्म बन्छन् भने बंगलादेशमा मात्रै वर्षमा ७०-१०० फिल्म बन्छन् ।

९० को दशकमा हरेक बंगलादेशी फिल्ममा हिन्दी फिल्मको नक्कल गरिएको हुन्थ्यो । दर्शकलाई हलमा तान्न बंगलादेशी निर्माताले सन् २००० पछि अश्लील फिल्मको सहारा लिएका थिए, जसकारण त्यहाँको फिल्म क्षेत्र खुम्चिन बाध्य भयो । त्यो समस्याबाट त्यहाँको फिल्म अहिले पनि मुक्त हुन सकेको छैन ।

स्वतन्त्रतापछि बंगलादेश सरकारले सन् १९७२ मा कुनै पनि विदेशी फिल्मलाई आफ्नो देशमा देखाउन अनुमति नदिने निर्णय गऱ्यो । स्थानीय फिल्मलाई त्यहाँ प्रवर्द्धन गर्ने सरकारको निर्णयको तर्क थियो । तर यो निर्णय उल्टो भयो । ८०-९० को अवधिमा बंगलादेशमा दर्शकलाई मनोरञ्जन दिने खालका फिल्म बन्न सकेनन् । त्यतिबेला ढलिउडमा नक्कल गर्ने चलन थियो । लगभग हरेक फिल्म हिन्दीबाट नक्कल गरेर बनाइएका थिए । निर्माता केवल बंगाली फिल्मलाई मात्र हलमा चलेको हेर्न चाहन्थे ।

सन् १९९३ पछि बंगाली फिल्म उद्योगलाई बलिउड अभिनेता सलमान शाहको माध्यमबाट पुनर्जीवित गर्ने मौका मिल्यो । शाहको डेब्यु फिल्म 'किमत थेके किमत' थियो जुन हिन्दी फिल्म 'कयामत से कयामत तक' को रिमेक थियो । यो फिल्म सुपरहिट भयो र सलमान चम्किए । यसपछि उनले धेरै फिल्म 'ब्याक टु ब्याक' पाए । सन् १९९४ मा उनका ६ वटा फिल्म रिलिज भए जसमध्ये अधिकांश हिट सावित भए । केही समयमै सलमानलाई बंगलादेशी फिल्मको पहिलो सुपरस्टार भनिन थाल्यो ।

फ्यानमाझ उनको क्रेज अचम्मको थियो र दर्शकलाई थिएटरमा तान्ने शक्ति सलमानमा मात्र थियो । सलमानलाई फ्यानमाझ 'प्रिन्स अफ धालिउड' भनेर चिनिन्थ्यो । सन् १९९६ मा उनका ९ फिल्म लगातार प्रदर्शन भए जसले हललाई जीवन्त बनायो । २४ वर्षको उमेरमा शाहको शंकास्पद अवस्थामा मृत्यु भयो । उनको शव आफ्नै अपार्टमेन्टको पंखामा झुण्डिएको अवस्थामा फेला परेको थियो । शाहले आत्महत्या गरेको प्रहरी अनुसन्धानबाट खुलेको छ ।

सलमानको मृत्युपछि दर्शकमा थिएटरप्रति मोहभंग भयो । सन् २००० सम्ममा थिएटर मालिक र निर्माताले सस्तो रणनीति अपनाए जसले बंगलादेशी फिल्मको पतन सुरु भयो । वास्तवमा निर्माताले अश्लील फिल्ममार्फत दर्शकको ध्यान आकर्षित गर्न खोजेका थिए । यसलाई बंगलादेशी फिल्मको इतिहासमा 'कट पिस एरा' भनिन्छ जसले फिल्म उद्योगलाई ध्वस्त पारेको थियो ।

बंगलादेशमा भल्गर फिल्मको सुरुवात सन् १९९९ मा आएको फिल्म 'रंगा बाउ'बाट भएको थियो । जसमा ऋतुपर्णो सेनगुप्ता, अमिन खान र हुमायुन फरीदीको मुख्य भूमिका थियो । यसका निर्देशक मोहम्मद हुसैन थिए । फिल्ममा धेरै रोमान्टिक दृश्य र भल्गर डान्स मुभ देखाइएको थियो । यसले दर्शकलाई हलमा आकर्षित गर्ने र डुब्दै गएको फिल्मको व्यवसायलाई पुनर्जीवित गर्नेमा निर्माता विश्वस्त थिए । मिडिया रिपोर्टका अनुसार यी सबै शक्तिशाली राजनीतिज्ञको सहमतिमा हुन्थ्यो ।

बंगलादेशी फिल्मलाई हलमा पोर्न फिल्मले विस्थापित गरेको छ । यसले बंगलादेशी फिल्मलाई ठूलो नोक्सान पुऱ्यायो, जसलाई हटाउन सन् २००३ मा अश्लील फिल्मविरुद्ध आन्दोलन सुरु भयो । फिल्म डेभलपमेन्ट कर्पोरेसनअघि कलाकारले प्रदर्शन गर्न थाले । फलस्वरूप, सरकारको हस्तक्षेपले बंगलादेशी फिल्म अन्ततः सन् २००९ मा अश्लील फिल्मको चंगुलबाट मुक्त भयो ।

विगत दश-पन्ध्र वर्षमा 'अयंबाजी', 'मोनपुरा', 'ढाका अट्याक' जस्ता फिल्मलाई मात्र मौलिक मानिन्छन् । यही कारण बंगलादेशी दर्शकले उनीहरूको प्रशंसा गरे र हेर्न हलसम्म पुगे ।

बंगलादेशी फिल्म उद्योगले सुरुमा सरकारबाट सहयोग पाएन । यो फिल्म उद्योगलाई अनाथ भनिन्थ्यो । तर सन् १९९६ मा शेख हसिना पहिलो पटक प्रधानमन्त्री भएपछि स्थितिमा उल्लेख्य सुधार आएको थियो । यो फिल्म क्षेत्रलाई पहिलो पटक सन् २००१ मा उद्योगको दर्जा दिइएको थियो । यससँगै बंगलादेश फिल्म विकास निगम (बीएफडीसी) पनि स्थापना भएको थियो । लामो समयदेखि सरकारले हरेक वर्ष केही फिल्म उद्योगलाई अनुदान पनि दिने गरेको छ ।

गत वर्ष नै शेख हसिनाले फिल्म निर्मातालाई राम्रो फिल्म बनाउनमा ध्यान दिन आग्रह गरेकी थिइन् । वास्तवमा घरेलु फिल्मको दयनीय अवस्थालाई ध्यानमा राख्दै निर्माता फिल्ममा पैसा लगानी गर्न चाहँदैनन्, जसकारण बंगलादेशमा फिल्मको भविष्यमाथि संकट गहिरिँदै गएको छ । शेख हसिनाले पनि सन् २०२२ मा देशमा फिल्म हलको अवस्था सुधार्न र नयाँ मल्टिप्लेक्स निर्माण गर्न ७०० करोड भारुको कोष घोषणा गरेकी थिइन् ।

सन् १९७२ मा बंगलादेशमा भारतीय फिल्म रिलिजमा प्रतिबन्ध लगाइएको थियो । त्यहाँको स्थानीय उद्योगको प्रवर्द्धन होस् र रोजगारी पनि बढोस् भन्ने उद्देश्य राखिएको थियो । तर कैयौं पटक नियम बदलिए र हिन्दी फिल्म रिलिज भए तर ती असफल साबित भए । सन् २००९ मा आमिर खानको 'थ्री इडियट्स' र सन् २०१० मा शाहरुख खानको 'माई नेम इज खान' बंगलादेशमा रिलिज भए पनि स्थानीय फिल्म संगठनको विरोधका कारण हलबाट हटाउनुपर्ने बाध्यता थियो ।

सन् २००९ मा सलमान खानको फिल्म 'वान्टेड' भारतमा रिलिज भएको थियो । सन् २०१५ मा बंगलादेशमा पनि रिलिज भएको थियो । तर केही स्थानीय सिनेमा संघसंस्थाले फिल्म रिलिजको विरोध गरेका छन् । त्यसपछि एक हप्तासम्म चलिरहेको ५० थिएटरबाट 'वान्टेड' हटाइयो । आठ वर्षपछि सन् २०२३ मा बंगलादेशी फिल्म क्षेत्रको कमजोर अवस्था देखेर शेख हसिनाले त्यहाँ विदेशी फिल्म रिलिजमा लगाइएको प्रतिबन्ध हटाइन् । बंगलादेश सरकारले १० वटा विदेशी फिल्म देशमा व्यावसायिक रुपमा रिलिज गर्ने निर्णय गरेको छ । एजेन्सीको सहयोगमा



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web Portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ | अङ्क ०६ | ने.सं. ११४४ | भाद्र ०५ गते बुधबार, २०८१ | 21 Aug. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## मृतकको सम्झनामा सापारु पर्व मनाईदैं



भक्तपुर । उपत्यकाका तीन जिल्ला मध्ये भक्तपुरमा मनाइने सापारु फरक रहेको जो कसैले सहजै भन्न सक्दछ । किनकी भक्तपुरमा सो पर्व हेर्नका लागि छिमेकी जिल्लाका साथै अन्य स्थानबाट समेत जात्रालुको भिड लाग्ने गर्दछ । भक्तपुरमा आठ रात नौ दिनसम्म सापारु पर्व मनाइने गरिए पनि औपचारिक रुपमा सोमवार साँझबाटै शुरु भएको छ । गुठी संस्थानले सुकुलढोकास्थित नाट्येश्वरीको पुजा गरि दरबार स्क्वायर स्थित बहटोलबाट घिन्ताङघिसी नाच निकालेसँगै भक्तपुरमा औपचारिकरुपमा सापारु शुरु गर्दछ ।

सापारु भाद्र कृष्ण पक्ष प्रतिपदाको दिन मनाईने भएपनि जनैपूर्णिमाको साँझ गुठी संस्थानले घिन्ताङघिसी नाच निकालेर भक्तपुरमा सापारुको औपचारिक शुरुवात गर्ने परम्परा बमोजिम सोमवार साँझ घिन्ताङघिसी नाच निकालेको हो । वर्ष दिनभित्र मृत्यु भएका आफन्तको सम्झनामा मनाईने धार्मिक, साँस्कृतिक तथा ऐतिहासिक महत्वको पर्व सापारु शुरु भएको जनाउ दिन गुठी संस्थानले घिन्ताङघिसी नाच बहटोलबाट शुरु भई भक्तपुर नगरका दरवारस्क्वायर, बालाखु गणेश, चोछें, भुलाछें, महालक्ष्मी स्थान, थालछें, गछें, सुर्यमढी, दतात्रय, गोलमढी, सुकुलढोका, टौमढी, नासमना, बंशगोल, इटाछें र खौमा लगायत क्षेत्रको परिक्रमा गरी पुन: सुकुलढोकामा पुगेर समापन भएको हो ।

धाँ बाजा, त:बाजा, धिमाय् बाजाको संयुक्त तालमा नाचमा सहभागीहरुले हातमा लठ्ठी जुधाएर घिन्ताङघिसी नाच नाचिन्छ । कृष्णाअस्टमीको दिनसम्म मनाईने भक्तपुरको सापारुमा प्रत्येक दिन साँझ विभिन्न टोलबाट घिन्ताङघिसी नाच सँगै विभिन्न व्यङ्ग्यात्मक नाटक, विभिन्न साँस्कृतिक नाचहरु प्रदर्शन गर्ने परम्परा रहेको छ । काठमाडौं उपत्यकालगायत नेवार समुदायको बाहुल्यता रहेका स्थानमा मंगलवारबाट सापारु पर्व मनाइन्छ । वर्ष दिनयता दिवंगत भएकाको सम्झनामा भाद्र शुक्ल प्रतिपदामा यो जात्रा मनाइने परम्परा अनुसार नेवार समुदायले सापारु पर्व मनाएको हो ।

बाँकी पेज ७ मा

## नेवा समाजमा ल्हासासंग ब्यापारिक र सांस्कृतिक सम्वन्धबारे अन्तरक्रिया

काठमाडौं । नेवा: समाजमा ल्हासासंग ब्यापारिक र सांस्कृतिक सम्वन्ध विषयमा सोधखोज गर्ने कार्यक्रम अरनिको समाजको सभा हल चाइना टाउनमा सम्पन्न भयो ।

कार्यक्रममा लामो अवधिसम्म ल्हासा ब्यापारमा संलग्न यल मतया: ब्यवस्थापन समितिका अध्यक्षसमेत रहेका तारणीबहादुर शाक्यले आफू ल्हासामा रहँदा तिब्वत स्वशासित क्षेत्रबाट दलाई लामालाई खेदेको र भारत भागेको घटनाबारे जिवन्त रुपमा आफ्नो धारणा स्पष्ट पारेको थियो । किम्डोल विहारका देवीचन्द्र श्रेष्ठले नेवा: समाजमा पहिला नै तिब्वत ब्यापार रहेको र त्यसलाई

आधुनिक समयसम्म पनि निरन्तरता दिने कार्य पनि त्यसरी काम गरिरहेकाहरुले गरेको बताए । असनका ल्हासा ब्यापारी मोतिकाजी तुलाधरले काठमाडौंमा अन्य कार्य नभएकाले पनि २६ दिन हिडेर र घोडा चढेर जानु पर्ने ल्हासा ब्यापार सञ्चालन गर्नको लागि कुटीसम्म पनि नेवा: समुदाय पुगेर उतातिर उनीहरु जान बाध्य भएको बताऐ । ल्हासा ब्यापारी प्रेमबीरसिं ताम्राकारले काठमाडौंमा जे जस्तो जात्रा पर्व मनाउने गरिन्थ्यो, कालिम्पोङ र ल्हासामा पनि ती सबैजसो जात्रा पर्व यहाँ जस्तै त्यहाँ बसोबास गरेका नेवा: समुदायले मनाउने गरेको जानकारी दिए । ल्हासा बारे अध्ययन गरी लेख रचना तथा पुस्तक तयार पारेका लेखक जगतबीर कंसाकारले आफू ल्हासा नपुगे पनि आफ्नो बाजे र बुवाको मुखबाट सुनेका

बाँकी पेज २ मा

## बागमती प्रदेशमा तामाङ र नेपाल भाषाको अनुवादक

काठमाडौं । बागमती प्रदेश सभाले पारित गरेको भाषा ऐन कार्यन्वयन गर्न प्रदेश संसदमा भाषा अनुवादकको व्यवस्था गरेको छ । बागमती प्रदेश सरकारले पहिलो चरणमा संसदीय गतिविधिलाई तामाङ र नेपाल भाषामा समेत अनुवाद गर्न अनुवादकको व्यबस्था गरेको हो ।

बागमती प्रदेशका मुख्यमन्त्री बहादुरसिंह लामाले तामाङ पत्रकार संघले राजधानीमा आयोजना गरेको तामाङ मिडिया अवार्ड वितरण समारोहलाई सम्बोधन गर्दै सो जानकारी दिएको हो । बागमती प्रदेश सभाले पारित गरेको भाषा ऐन २०८१ बैशाख २४ गतेबाट लागु भएपछि सो विधेयक कार्यन्वयनका क्रममा बागमती प्रदेश सरकारले सो व्यबस्था गरेको हो ।

बागमती प्रदेशले नेपाली भाषाका अतिरिक्त तामाङ र नेपाल भाषालाई सरकारी कामकाजी भाषा बनाउने गरी भाषा ऐन जारी गरी अहिले कार्यन्वयनको चरणमा रहेको छ ।

नेपाली बाहेक प्रदेश भित्र बहुसंख्यंक जनताले बोल्ने भाषाको संरक्षण, सम्बर्द्धन तथा विकास गरी सरकारी कामकाजलाई सरल र सहज बनाउने उद्देश्यका साथ सो ऐन ल्याइएको हो । सो भाषा ऐन अनुसार बागमती प्रदेश सरकारको नियमन क्षेत्रभित्र रहेका सरकारी निकाय, सार्वजनिक संस्था तथा प्रतिष्ठानलगायतमा सो भाषालाई सरकारी कामकाजमा प्रयोग हुनेछ ।

यो ऐन कार्यन्वयनमा आए पछि प्रदेश भित्रका सबै सरकारी दस्तावेजहरु तामाङ र नेपाल भाषामा अनुवाद गरी

बाँकी पैंज ७ मा

## मध्यपुर थिमिमा सापारुसँगै साँस्कृतिक महोत्सव शुरु



भक्तपुर । साँस्कृतिक नगरीको रुपमा रहेको मध्यपुर थिमिमा यो वर्ष भव्यरुपमा सापारुको दिन देखि ५ दिन र ५ रात सांस्कृतिक महोत्सवको पर्वमा मध्यपुरबासी रम्ने भएका छन् । पुरातात्त्विक जात्रा, पर्वहरुसङ्ग थिमिवासी ५ दिन तथा ५ रात पुरै जागा भएर संस्कृती जगेर्नामा तल्लिन भएर लाग्नेछन् ।

यो वर्ष नगर क्षेत्रमा तपसिल वमोजिमका समयमा जात्रा पर्वहरु मनाईदैछ ।

नेपाल सम्वत ११४४ गुँलागा पारुका दिन हिजो भदौ ४ गते गाईजात्राका दिन बिहानैदेखि थिमि नगरपालिका क्षेत्रमा विभिन्न साँस्कृतिक झाँकीहरु प्रदर्शन भएका थिए । आफ्नो परिवारमा दिंवगत भएका आफन्तहरुको सम्झना स्वरुप साँज्या (साँस्कृतिक झाँकि) निकाल्ने गरिन्छ ।

बाँकी पेज ७ मा

## मानव बेचबिखनको जालो बन्दै सामाजिक सञ्जाल

काठमाडौं । एसइई परीक्षाको नतिजा आउन बाँकी थियो । कैलालीका चार किशोरीहरुले घर खर्च जुटाउन जागिर गर्ने निधो गरे । उनीहरुको चाहनाअनुरुप गाउँमा रोजगार पाउने अवस्था त्यति सहज थिएन । रोजगार खोज्ने मनसाय बनाइरहँदा उनीहरु इमोमार्फत भारतीय नागरिक बताउने एक अज्ञात पुरुषसँग कुराकानी गर्न थाले । ती व्यक्तिको सोधनीमा उनीहरुले आफ्नो घरको गरिबी र रोजगारीको अवस्थाबारे जानकारी गराए । आर्थिक अभावको कमजोरीको फाइदा उठाउँदै ती पुरुषले किशोरीहरुलाई इमो एपमा कुरा गरेर भारत बोलाए । त्यहाँ २० हजार भारतीय रुपैयाँको जागिर दिने प्रलोभन देखाए । केही दिनको कुराकानीमै विश्वास गरेर चार किशोरी अज्ञात व्यक्तिको भनाइको भरमा भारत जान कैलालीको धनगढीस्थित नेपाल-भारत सीमामा पुगे । कहिल्यै एक्लै जिल्ला पार नगरेका ती किशोरीहरुलाई इमो माध्यमबाटै बसपार्कको टिकट कसरी काटने र कसरी सीमापार गर्ने तरिकासमेत इमोमार्फत ती पुरुषले सिकाएका थिए । घरका कुनै पनि सदस्यलाई जानकारी नगराई भारत जान हिँडेका किशोरीहरुलाई माइती नेपाल कैलालीले सीमामा रोक लगायो । "ती किशोरीहरुसँग न झोला थियो न कुनै सामग्री । घरमा कसैलाई खबर नगरी भारत जागिर गर्न जान लागेका रहेछन्, मानव बेचबिखनको शङ्कास्पद अवस्था लागेर तत्काल रोक्यौं", माइती नेपाल कैलालीका संयोजक शिव चरण चौधरीले घटना सुनाउदै भने, "पछिल्लो समय सामाजिक सञ्जालले दलालको मनोबल बढाएको छ, मानव बेचबिखनको उच्चतम् खतरा बढ्दो छ ।" चौधरीका अनुसार फेसबुक, भाइवर, ह्वाट्स एपजस्ता सामाजिक सञ्जालमार्फत दलालले मानव बेचबिखनको जालो थापिरहेको अनुभव सुनाए । यहाँसम्म कि अपराधमा संलग्न व्यक्ति वा समूहसम्म सम्पर्कमा पुग्न चुनौती थपिएको पनि उनले बताए । विदेशमा बसेर नेपाल लक्षितगरी काम गर्ने गिरोह सक्रिय रहेका छन् ।

राष्ट्रिय मानवअधिकार आयोगले गरेको 'मानव बेचबिखन तथा ओसारपसारसम्बन्धी राष्ट्रिय प्रतिवेदन २०७९' मा १५ देखि १६ वर्षका किशोरीहरु पुजाका लागि, विवाह गरेर जानेलगायतका प्रलोभनमा परी फेसबुक, इमोबाट चिनजानका आधारमा भारततर्फ लाने गरेको अवस्था उल्लेख छ ।

बाँकी पेज २ मा

## जलवायु परिवर्तनको जोखिम न्यूनीकरणका लागि आदिवासी ज्ञान उपयोगी

काठमाडौं । विश्वमा बढ्दै गएको जलवायू परिवर्तनका असरबाट हुन सक्ने जोखिम न्यूनीकरणमा आदिवासी जनजाति महिलाको परम्परागत ज्ञान, सीप र प्रथाजन्य अभ्यासको महत्वपूर्ण योगदान रहेको अनुसन्धानबाट प्राप्त अध्ययनले पुष्टी गरेको पाइएको छ। आदिवासी जनजाति अनुसन्धान तथा विकास केन्द्र (सिप्रेड)ले हिमाल, पहाड र तराईका आदिवासी महिलाहरुमा गरेको अनुसन्धानबाट यस्तो अवस्था देखिएको सो संस्थाकी कार्यकारी निर्देशक डा. पासाङ डोल्मा शेर्पाले राजधानीमा आयोजित कार्यक्रममा अनुसन्धान प्रतिवेदन सार्वजनिकीकरण तथा प्रमाणिकरण मार्फत जानकारी दिएका छन् ।

'जलवायु संकटलाई अनुकूलन गर्ने आदिवासी महिलाहरुमा स्थानविशेष फरक-फरक ज्ञान र अभ्यास रहेको पाइएको छ ।' प्रतिवेदन सार्वजनिकरण तथा प्रमाणिकरण कार्यक्रममा कार्यकारी निर्देशक डा.शेर्पाले बताए -'प्रकृति तथा वातावरणसंग निकट रहेर गरिने साँस्कृतिक प्रथा, परम्परा, प्रथाजनित सामाजिक गतिविधि र विश्वास प्रणाली नै जलवायु परिवर्तनसंग जुध्ने आदिवासी महिलाको शक्ति हो ।', उनले भने ।

सिप्रेडले मुलुककै सीमान्तकृत जिल्ला दार्चुला मूल थातथलो भएका आदिवासी व्याँसी सौका (रोङ), रुकुम पूर्वका खामभाषी मगर र बर्दियाका थारु महिलाहरु समेत हिमाल, पहाड र तराईका तीन जिल्लामा जलवायु परिवर्तनले पारेको प्रभाव र सो प्रभाव न्यूनीकरण तथा अनुकूलनमा आदिवासी जनजाति महिलाको ज्ञान प्रणाली सम्बन्धमा अनुसन्धान गरेको थियो ।

आदिवासी ज्ञान र अभ्यासहरु

अनुसन्धानमा आदिवासी महिलाहरुको परम्परागत जीवनशैली, साँस्कृतिक परम्परा, चाँडपर्व तथा प्राकृतिक स्रोत माथिको निर्भरतालाई विश्लेषण गरिएको छ। अनुसन्धान प्रतिवेदनमा हिमाली जिल्ला दार्चुलामा खाद्य सुरक्षाका लागि भण्डारण गर्ने "किन्" पद्धति (जमीन मुनी भण्डारण गर्ने), विऊलाई सुरक्षा गर्ने "कोछा" (छालाको झोला), भून्छिम (काठको वाकस) तथा ऋतु अनुसार बसाई सर्ने पद्धतिहरु

बाँकी पेज ७ मा

## पुरुषबाट महिला बनेका र जन्मादाकै महिलाको अधिकार फरक कि एकै ?

काठमाडौं । "स्वअनुभूतिको आधारमा लैङ्गिक पहिचान पाउनु व्यक्तिको संवैधानिक हक नै हो,यो हक निवेदकले उपभोग गर्न पाएको अवस्था छैन," अधिवक्ता सञ्जय अधिकारीले सर्वोच्च अदालतमा गरेको बहसमा उठाएको प्रश्न हो यो ।

यौनाङ्गको आधारमा केटा भनी पहिचान गरियो, त्यसै अनुसार नाम पनि राखियो । निवेदकले आफू महिला रहेको अनुभूत गरे । आफ्नो नाम रुक्सना राखे । राज्यले उनी जस्ता व्यक्तिलाई दिएको छुट्टै लैङ्गिक पहिचान अन्यमा नागरिकता लिए ।

अन्यको सट्टा महिला कायम गर्न दायर गरेको रिट निवेदनमा अधिवक्ता अधिकारीले अन्य नाम तथा लैङ्गिक विवरण बदर गरी महिला कायम गर्ने आदेश मागे ।

सरकारी निकायका तर्फबाट सहन्यायाधिवक्ता गोविन्द खनालले एकपटक लिङ्ग अन्य लेखी नागरिकताको प्रमाणपत्र प्राप्त गरिसकेपछि फेरि कुनै वस्तुगत प्रमाण विना नै लिङ्ग संशोधन हुने विषय नभएको दलिल पेस गरे । यसले सामाजिक परिवेश र परिपाटीलाई नै प्रतिकुल असर गर्ने सहन्यायाधिवक्ता खनालले उल्लेख गरे ।

लिङ्ग परिवर्तन गरेको चिकित्सकीय प्रमाण पेस गरेमा मन्त्रिपरिषद्को निर्णयबाट मात्र परिवर्तित लैङ्गिक पहिचानमा नागरिकता दिने गरिएको छ । पछिल्लो समय व्यक्तिको लैङ्गिक पहिचानको निर्धारणको आधार जैविक तत्त्वको अतिरिक्त सम्बन्धित व्यक्तिको स्वअनुभूति तथा निजको ब्रेन सेक्सलाई पनि बनाउनु पर्ने अवधारणा विकसित भएको पाइन्छ । अदालतले आदेशमा उल्लेख गरेको छ ।

सर्वोच्चको यही आदेश यतिबेला चर्चासँगै विवादमा परेको छ । जन्मँदाका बालकले महिलाको र बालिकाले पुरुषको विवरणमा नागरिकता लगायतका सरकारी कागजपत्र लिन पाउने आदेशले अधिकारकर्मीहरूलाई

बाँकी पेज २ मा

बिमTIMES

# जनआकाश साप्ताहिकको वार्षिकोत्सवमा मोहन कार्कीकृत “कृपज” लोकार्पण

-जयराम बिडारी

काठमाडौं । सत्य तथ्य र प्रभावकारी समाचार सम्प्रेषित गर्दै आएको जनआकाश साप्ताहिकले आफ्नो स्थापनाको १७औं बार्षिकोत्सव भव्यताका साथ सम्पन्न गरेको छ ।

जनआकाश मिडिया प्रा. लि. को आयोजनामा मुक्तिनाथ विकास वैंक, एनएमबी बैंक, कामना सेवा विकास बैंक लि. तथा म्याक लुब्रिकेन्टको प्रायोजन तथा अखवार नेपाल एवं सैलुङ अनलाइन मिडियाको संयोजनमा विहिबार नेपाल प्रज्ञा प्रतिष्ठान कमलादीस्थित लेखनाथ सदनको प्रेक्षालयमा एक विशेष समारोहको आयोजनामा उपसभामुख इन्दिरा रानामगरको प्रमुख आतिथ्यता तथा जनआकाश मिडियाका अध्यक्ष मोहन कार्कीको अध्यक्षतामा १७औं वार्षिकोत्सव सम्पन्न गरिएको हो ।

सो अवसरमा जनआकाश साप्ताहिकका प्रधानसम्पादक मोहन कार्कीद्वारा लिखित ‘कृपज’ नामक पुस्तकको लोकार्पण, स्रष्टाहरुलाई सम्मान तथा संगीत खबर कार्यक्रमको प्रोमो प्रमुख अतिथिको हातवाट उद्धाटन गरी कार्यक्रम सम्पन्न गरिएको थियो । कार्यक्रममा प्रमुख अतिथिको मन्तव्य व्यक्त गर्ने क्रममा उपसभामुख रानामगरले संघर्षबाट खारिएर अघि बढेका सम्पादक मोहन कार्कीकृत ‘कृपज’ (कृषि,पर्यटन र जलविद्युतले) समग्रमा विकास निर्माणका लागि स्पष्ट निर्देश गरेकोमा खुशी व्यक्त गर्दै कृति सफलताको शुभकामना व्यक्त गरिन् । उनले भनिन् ‘’म आफै पनि सानो छँदा दुःख गरेरै अघि बढेको बताउँदै अहिले पनि सामाजिक क्षेत्रमै बालबालिकाको लागि काम गरेर आएको व्यक्ति हुँ । कतिपय बालबालिकाको आमा बाबुकै टुङ्गो नलागेका कोहीका बाबु-आमा जेल परेका पिडितहरु छन् । तिनीहरुलाई बिभिन्न ठाउँबाट सहयोग जुटाएर शिक्षा, दिक्षा दिईरहेको छु, र उनिहरुलाई एउटै परिवार जस्तो गरी बुबा-आमा, दाजु-भाई दिदी बहिनी जसरी पालन पोषण गरी हुर्काइरहेको उल्लेख गर्दै हाल स्कुल सञ्चालन गरिरहेको बताइन् । आफूले सघर्षहरुलाई बुझेको र सञ्चार क्षेत्र निष्पक्ष र सन्तुलित हुन नसकेको वर्तमान अवस्थामा जनआकाशले निष्पक्ष पत्रकारिताको धर्म निर्वाह गरेकोमा प्रशंसा गर्दै १६औं वार्षिकोत्सवका अवसरमा शुभकामना दिन पाएको खुशी व्यक्त गरिन् । साथै समाजमा भएका सत्यतथ्य घटनालाई सञ्चारकर्मीले ऐनाको रुपमा जस्ताकोत्यस्तै देखिने गरी भूमिका निर्वाह गर्नुपर्नेमा जोड दिइन् ।

उक्त अवसरमा मोहन कार्कीद्वारा लिखित ‘कृपज’ माथि समिक्षात्मक टिप्पणी गर्दै दामोदर दीपकले विद्रोह संघर्ष र लगनशीलताका परिचायकका रुपमा पहिचान स्थापित गरेका मोहन कार्की राष्ट्र निर्माणका संवाहकका रुपमा स्थापित भएको बताए । । सो अवसरमा विशेष अतिथिका रुपमा नेपाल राष्ट्रिय व्यवसायी महासंघका कुमार कार्कीले विचौलियाहरुको अन्त नभईकन देशको विकास गर्न नसकिने धारणा राखेका थिए । त्यसैगरी पर्यटन विज्ञ खुम बहादुर सुवेदी, विशेष अतिथि नेपाल पत्रकार महासंघका केन्द्रीय सदस्य शान्तराम विडारीले मन्तव्य राखेका थिए ।

कार्यक्रममा स्वागत मन्तव्य जन आकाशका पत्रकार विनोद कार्कीले गरेका थिए, भने कार्यक्रमको सञ्चालन रामेछाप सांस्कृतिक कालकार समाजका सचिव नकुल गौतमले गरेका थिए ।

# बंगलादेश हिंसामा संयुक्त राष्ट्रसंघको सनसनीपूर्ण रिपोर्ट

एजेन्सी । संयुक्त राष्ट्र मानव अधिकार कार्यालयले एक प्रारम्भिक प्रतिवेदनमा बंगलादेशमा जुलाई १६ देखि अगस्त ११ सम्मको अशान्तिमा हिंसात्मक घटनाहरूमा झन्डै ६५० जनाको मृत्यु भएको जनाएको छ । प्रतिवेदनले गैरन्यायिक हत्या, स्वेच्छाचारी गिरफ्तारी र थुनामा राख्ने विषयमा पूर्ण, निष्पक्ष र पारदर्शी छानबिन गर्न सुझाव दिएको छ ।

‘बांग्लादेशमा हालैका आन्दोलन र अशान्तिको प्रारम्भिक विश्लेषण’ शीर्षकको १० पृष्ठको प्रतिवेदनअनुसार जुलाई १६ देखि अगस्ट ४ सम्म करिब ४०० जनाको मृत्यु भएको थियो भने अगस्ट ५ र ६ मा प्रदर्शन हिंसात्मक भएपछि थप २५० जनाको मृत्यु भएको थियो ।

आन्दोलनले सरकार विरोधी आन्दोलनको रुप लिएपछि शेख हसिनाले प्रधानमन्त्री पदबाट राजीनामा दिनुपरेको थियो । मिडिया र आन्दोलनरत समूहहरूबाट उपलब्ध सार्वजनिक रिपोर्टहरूले दावी गरेको छ कि १६ जुलाई र ११ अगस्ट बीच, भेदभाव विरोधी विद्यार्थी आन्दोलन पछि हिंसाका घटनाहरूमा ६०० भन्दा बढी व्यक्तिको मृत्यु भएको थियो ।

शुक्रबार जेनेभामा जारी गरिएको प्रतिवेदनमा त्यस समयदेखिको प्रतिशोधात्मक हत्याको सङ्ख्या निर्धारण हुन बाँकी रहेको उल्लेख गरिएको छ । युएनएचसिआर प्रतिवेदनले अगस्ट ६ र ११ बीचमा हिंसामा परेका घाइतेहरूको उपचारका क्रममा समेत धेरैको मृत्यु भएको बताएको छ ।

प्रतिवेदनमा मृत्यु हुनेमा प्रदर्शनकारी, यात्रुहरू, पत्रकार र धेरै सुरक्षा बलहरू समावेश छन् । यसले हजारौं प्रदर्शनकारी र पैदल यात्रीहरू घाइते भएको र अस्पतालहरू बिरामीहरूले भरिएको बताए । प्रतिवेदनले कर्फ्यू र इन्टरनेट बन्दका कारण आवागमन प्रतिबन्धले सूचना सङ्कलनमा बाधा पुर्‍याएको हुनाले मृत्यु हुनेको संख्यालाई कम अनुमान गरिएको छ । प्रतिवेदनमा यो पनि भनिएको छ कि अधिकारीहरूले अस्पतालहरूले मारिएका र घाइतेहरूको विवरण उपलब्ध गराउन रोकेका छन् ।

“त्यहाँ सुरक्षा बलहरूले परिस्थितिलाई सामना गर्न अनावश्यक र अत्यधिक बल प्रयोग गरेको छ,“ प्रतिवेदनले भन्यो । तसर्थ, यी सबैको स्वतन्त्र छानबिन आवश्यक छ ।“ प्रतिवेदनमा भनिएको छ, “अन्यायिक हत्या, स्वेच्छाचारी गिरफ्तारी र थुनामा राख्ने, जबर्जस्ती बेपत्ता पार्ने, यातना र दुर्व्यवहार र अभिव्यक्ति स्वतन्त्रतामा कडा प्रतिबन्ध लगायतका कथित उल्लङ्घनहरूको पूर्ण, निष्पक्ष र पारदर्शी छानबिनको आवश्यकता छ ।”

अगस्ट ५ मा हसिनाले राजीनामा दिएपछि धार्मिक अल्पसंख्यकका सदस्यहरूमाथि लुटपाट, आगजनी र आक्रमणका साथै पूर्व सत्तारुढ दल र प्रहरीका सदस्यहरू विरुद्ध प्रतिकारात्मक हमला र हत्या भएको रिपोर्ट आएको छ । संयुक्त राष्ट्रको प्रतिवेदनले शान्ति र व्यवस्थालाई छिट्टै पुनर्स्थापना गर्नुका साथै जीवनको क्षति, हिंसा र प्रतिशोधलाई रोक्न प्रभावकारी कदम चाल्नुपर्ने आवश्यकतामा पनि जोड दिएको छ ।

संयुक्त राष्ट्र मानवअधिकार प्रमुख भोल्कर टर्कको कार्यालयले शुक्रबार प्रारम्भिक प्रतिवेदन जारी गर्दै बंगलादेशमा धार्मिक अल्पसंख्यकहरू विरुद्धको हिंसालगायत मानवअधिकार उल्लङ्घन र हिंसाका लागि जिम्मेवार सबैलाई जवाफदेहिताको आवश्यकतामा जोड दिएको छ ।

सबै मानवअधिकार उल्लङ्घनमा व्यापक, निष्पक्ष र पारदर्शी छानबिन गर्न आह्वान गर्दै टर्कीले दक्षिण एसियाली मुलुकमा संक्रमणकाल मानवअधिकार, समावेशीता र विधिको शासनमा आधारित शासन सुनिश्चित गर्ने ऐतिहासिक अवसर भएको बताए । यस महिनाको अशान्तिमा बंगलादेशमा अल्पसंख्यक समुदायका धेरै मन्दिर, घर र व्यापारिक प्रतिष्ठान ध्वस्त भएका छन् ।

# थाइल्याण्डको प्रधानमन्त्रीमा ३७ वर्षिय पातोङटार्न नियुक्त

एजेन्सी । थाइल्याण्डमा बेलाबेलामा राजनीतिक उथलपुथल हुने गरेको र भइरहेको छ । केही दिनअघि मात्रै थाइल्याण्डको सर्वोच्च अदालतले प्रधानमन्त्री श्रेष्ठ थाभिसिनलाई प्रधानमन्त्री पदबाट राजीनामा दिन आदेश दिएको थियो । यसपछि अर्को राजनीतिक घटनाक्रम बाहिर आएको छ । थाइल्याण्डको संसदले युवा नेतालाई प्रधानमन्त्रीमा चयन गरेको छ । सामान्यतया, दक्षिण एशियाली देशहरूमा, मानिसहरू यो उमेरमा आफ्नो पीएचडी पूरा गर्न सक्षम छैनन् । थाइल्यान्डका पूर्वप्रधानमन्त्री तथा व्यापार व्यवसायी थाक्सिन सिनावात्राकी छोरी पातोङटार्न सिनावात्रा देशकै कान्छी प्रधानमन्त्री बनेकी छन् । संसदमा नेता चयनका लागि शुक्रबार मतदान भएको थियो । जसमा पातोङटार्न सिनावात्रा प्रधानमन्त्रीमा निर्वाचित भएका छन् । पटङटार्न सिनावात्रा अहिले ३७ वर्षकी भइसकेका छन् ।

वास्तवमा, थाइल्याण्डको नयाँ प्रधानमन्त्रीमा पातोङटार्न सिनावात्रा निर्वाचित भएका छन् । उनले देशको ३१ औं प्रधानमन्त्रीको रुपमा कार्यभार सम्हालेका छन् । उनी फेउ थाई पार्टीकी नेतृ हुन् भने उनी अहिलेसम्मकै कान्छी प्रधानमन्त्री पनि हुन् । आचारसंहिता उल्लंघन मुद्दामा अदालतको फैसलापछि पूर्वप्रधानमन्त्री श्रेष्ठ थाविसिनलाई हालै हटाइएको थियो । शुक्रबार भएको संसदीय मतदानमा सांसदहरुले सिनावात्रालाई देशको प्रधानमन्त्रीमा निर्वाचित गरेका हुन् । थाइल्याण्डको इतिहासमा पातोङटार्न सिनावात्रा दोस्रो महिला प्रधानमन्त्री बन्नेछ । योसँगै उनी आफ्नो परिवारबाट प्रधानमन्त्रीमा निर्वाचित हुने तेस्रो नेता हुन् । नवनिर्वाचित प्रधानमन्त्रीका पिता थाक्सिन सिनावात्रा र उनकी काकी यिङलक सिनावात्रा पनि यो महत्वपूर्ण पदमा पुगि सकेका छन् ।

समर्थनमा ३१९ मत

पातोङटार्न सिनावात्रा फेउ थाई पार्टी को एक प्रभावशाली नेता हो । उनले ११ दलको गठबन्धनको नेतृत्व गरिरहेकी छिन् । उनको समर्थनमा ३१९ सांसद छन् । उनलाई प्रधानमन्त्रीमा निर्वाचित भएकोमा सबै नेताहरुले बधाई समेत दिएका छन् । थाइल्याण्डका नवनिर्वाचित प्रधानमन्त्री पातोङटार्नको राजनीतिक पृष्ठभूमि पनि निकै प्रभावशाली रहेको छ । उनी पूर्व प्रधानमन्त्री थाक्सिन सिनावात्राकी कान्छी छोरी हुन् । उनको राजनीतिक करियर पनि केहि विवादहरु संग सम्वन्धित छ । उनी देशका लोकप्रिय नेताहरूमा पनि पर्छन् । पटङटार्न प्रधानमन्त्री बनेपछि गठबन्धनको एकता सुदृढ हुने राजनीतिक विज्ञहरुको भनाइ छ । यससँगै दलहरूबीचको गुटबन्दी पनि कम हुने सम्भावना छ ।

पटङटार्न सिनावात्राको अगाडि ठूलो चुनौती

पटङटार्न सिनावात्राले यसअघि कहिल्यै सरकारमा काम गरेका छैनन् । तर, उनको परिवार एक शक्तिशाली र प्रभावशाली राजनीतिक परिवार हो । थाइल्यान्डको अर्थतन्त्रलाई ट्र्याकमा ल्याउनु उनको सामु अहिलेको सबैभन्दा ठूलो चुनौती हो । थाइल्याण्डको स्टक १.१ प्रतिशतले बढेको छ । यो वर्ष शेयर बजारमा समग्रमा ९ प्रतिशतसम्मको गिरावट आएको छ ।

## पुरुषबाट.......

झस्काएको छ ।

जन्मँदा बालक जन्मिए महिलाको र बालिका जन्मिए पुरुषको अनुभूति गर्नेहरूले दुई दशक लामो सङ्घर्ष पछि छुट्टै पहिचान पाउन थालेका छन् । राज्यले पुरुष र महिला भन्दा भिन्न लैङ्गिक पहिचानका व्यक्तिलाई अन्यमा नागरिकता दिएको छ ।

यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक व्यक्तिहरूलाई दिने अन्य पहिचानको नागरिकतामा तेस्रो लिङ्गी महिला, तेस्रो लिङ्गी पुरुष, अन्तरलिंगी महिला, अन्तरलिंगी पुरुष उल्लेख गर्ने व्यवस्था नागरिकता कार्यविधिमा गर्नुपर्ने माग अभियन्ताहरूले राखेका छन् ।

तर, अन्य पहिचानमै नागरिकता पाइसकेका व्यक्तिलाई स्वअनुभूतिका आधारमा पुरुष या महिलाको नागरिकता दिनु पर्ने अदालतको आदेशले सरकारी निकाय अन्योलमा परेका छन् भने अधिकारकर्मीहरू अचम्मित ।

सर्वोच्च अदालतले यस्तो आदेश २० कार्तिक २०८० मा दिएको हो । आदेशको पूर्णपाठ सार्वजनिक भएपछि अधिकारकर्मीहरू बल्ल बहसमा आएका हुन् । सुनिलबाबु पन्तविरुद्ध नेपाल सरकार रहेको ६ पुस २०६४ को निर्देशनात्मक आदेश अनुसार बल्ल अन्य लैङ्गिक पहिचान दिने संवैधानिक व्यवस्था कार्यान्वयनको चरणमा छ । यही बेला सर्वोच्चले अन्यमा नागरिकता लिएका व्यक्तिलाई महिला या पुरुषको नागरिकता दिन परमादेश आदेश जारी गरेको छ ।

सर्वोच्चको पारलिंगी (बालक जन्मेका, महिला र बालिका जन्मेका, पुरुष)लाई महिला वा पुरुष बनाउने फैसलाले अनेक प्रश्न उठाएको छ ।

मस्तिष्क लिङ्ग अवधारणाले व्यक्तिको दिमागमा जे छ (उसले जे सोच्छ) त्यो नै उसको लैङ्गिक पहिचान हो भन्छ । व्यक्तिको शरीर रचना, फिजियोलोजी, प्रजनन आवश्यकता र भिन्नतालाई खारेज गर्छ र यसले महिला, पुरुष र तेस्रो लिङ्गको भिन्न शारीरिक आवश्यकता र विशिष्टतालाई बेवास्ता गर्छ ।

परमादेश आदेशले उठाएका ११ प्रश्न

१. सेना, प्रहरी र सशस्त्र प्रहरी भर्ती (बालक जन्मेका) पारलिंगी महिला (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् वा नगरेका पनि हुन सक्छन्) र (बालिका जन्मेका) पारलिंगी पुरुष, (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् वा नगरेका पनि हुन सक्छन्) को लागि कसरी व्यवस्थापन गर्ने ? अनि तेस्रो लिङ्गीको कसरी व्यवस्थापन गर्ने?

२. (बालक जन्मेका) पारलिंगी महिला (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् वा नगरेका पनि हुन सक्छन्) र (बालिका जन्मेका) पारलिंगी पुरुष (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् या नगरेका पनि हुन सक्छन्) को लागि होस्टेल र शौचालय कसरी व्यवस्थापन गर्ने ? अलग राख्ने ? वा महिला र पुरुषसँग हुनुपर्छ कि पर्दैन ?

३. (बालक जन्मेका) पारलिंगी महिलाहरू (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् वा नगरेका पनि हुन सक्छन् ) शिक्षा, निजामती सेवा, प्रहरी, सेना, सशस्त्र प्रहरी, राजनीतिक सहभागिता लगायत महिला आरक्षणमा पहुँच गर्न योग्य हुन्छन् कि हुन्नन् ?

४. पारलिंगी (बालिका जन्मेका) पुरुषहरू (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् वा नगरेका पनि हुन सक्छन्) शिक्षा, निजामती सेवा, प्रहरी, सेना, सशस्त्र प्रहरी, राजनीतिक सहभागिता लगायत पुरुष आरक्षणमा पहुँच गर्न योग्य हुन्छन् कि हुन्नन् ?

५.(बालिका जन्मेका) पारलिंगी पुरुष (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका हुन सक्छन् वा नगरेका पनि हुन सक्छन्) खेलकुद र सेना भर्ती प्रशिक्षणमा पुरुषसँग कसरी प्रतिस्पर्धा गर्ने ? जबकि (बालक जन्मेका) पारलिंगी महिलाहरूलाई महिलासँग प्रतिस्पर्धा गर्न लाभदायक हुनेछ ।

६. (बालिका जन्मिएका) पारलिंगी महिला र (बालिका जन्मेका) पारलिंगी पुरुषले, पुरुष वा महिलासँग विवाह गर्दा उनीहरूको जन्मँदाको लिङ्ग बताउनु पर्छ कि पर्दैन ? अदालतको निर्णयले लैङ्गिक इतिहास गोप्य राख्नुपर्ने भनेको छ । विवाह गर्दा जन्मँदाको लिङ्ग सोध्न पाउने कि नपाउने ? सन्तान नहुँदा डिभोर्स गर्न पाउने कि नपाउने ?

७. (बालक जन्मेका) पारलिंगी महिला (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका छैनन्) ले बच्चा जन्माउँदा नयाँ लिङ्गका कारण उनीहरूलाई आमा भनिन्छ, बुबा भन्ने ?

८. (बालिका जन्मेका) पारलिंगी महिला (जसले आफ्नो यौन अङ्ग परिवर्तन गरेका छैनन्)ले बच्चा जन्माउँदा नयाँ लिङ्गका कारण उनीहरूलाई बुबा भनिन्छ, कि आमा भन्ने ?

९. महिला नै हुँदा पहिला नै विवाह भई सकेको थियो पुरुषसँग । तर अब (बालिका जन्मेका) पारलिंगी पुरुष बनेपछि, सम्बन्धविच्छेद गरेमा कुन बुबाले सन्तानको जिम्मा लिने ?

१०. (बालक जन्मेका) पारलिंगी महिला बनेपछि र सम्बन्धविच्छेद गरेपछि कुन आमाले सन्तानको पालनपोषण गर्नुपर्छ ?

## नेवा......

कुराहरु आफ्ना सन्तानहरुलाई र साथीहरुलाई सुनाउँदा अत्यन्तै अचम्म मान्ने गरेकाले त्यस सम्वन्धमा आफूले लेख्न थालेको बताए । नेपालभाषा एकेडेमी र अरनिको समाजको संयुक्त आयोजनामा भएको कार्यक्रममा डा. सर्वोत्तम डंगोलले कार्यक्रम माथि प्रकाश पारेको थियो ।

## मानव....

आयोगले २०७७ फागुन १३ देखि २१ गतेसम्म मोरङ, इलाम, सुनसरी र झापा जिल्लामा गरेको अनुगमनबाट प्राप्त घटनाको प्रकृतिले पनि सूचना प्रविधिको प्रयोग गर्न नजान्दा बेचबिखनको जोखिम बढेको प्रष्ट पार्छ । आयोगको अनुगमनमा उल्लेख छ, “एक जना दाङ जिल्लाकी किशोरीले मोबाइलमा फेसबुक चलाउँदा भारतका नागरिकले फेसबुकमा फोटो देखाएर मोडल बनाएदिने प्रस्ताव राखेपछि ती किशोरी दाङबाट रात्रि बस चढेर सुनसरी जिल्लाको भन्टाबारी सीमानाका हुँदै जान लाग्दा निगरानी केन्द्रबाट सम्झाइबुझाई घर फिर्ता पठाएको थियो ।”

मानव बेचबिखनका मुद्दा बढ्दो मानव बेचबिखन तथा ओसारपसार नियन्त्रणका लागि समयसापेक्ष रूपमा विभिन्न ऐन नियमहरू तर्जुमा गरिएका छन् । मानव बेचबिखन तथा ओसारपसार (नियन्त्रण) ऐन, २०६४ र मानव बेचबिखन तथा ओसारपसार (नियन्त्रण) नियमावली, २०६५ जारी भएको छ । मानव बेचबिखन विशेषगरी महिला तथा बालबालिकाहरूको बेचबिखन तथा ओसारपसार नियन्त्रणसम्बन्धी राष्ट्रिय कार्ययोजना, २०६८ तथा यसको कार्यान्वयन योजना, २०७१ बनाई लागू गरिएको छ । सरकारको निरन्तर प्रयास जति देखिन्छ उति मानव बेचबखिनको सङ्ख्या भने बढ्दै गएको तथ्याङ्कले देखाउँछ । मानव बेचबिखन अनुसन्धान ब्युरोको चार वर्षको तथ्याङ्क हेर्दा मानव बेचबिखनको अवस्था उच्च देखिन्छ । आव २०७७ ७८ मा १३४ मुद्दा दर्ता भएकामा २०८०/८१ मा सङ्ख्या बढेर १६६ पुगेको छ । महान्यायधिवक्ताको कार्यालयको २०७९/८० को वार्षिक प्रतिवेदन हेर्ने हो भने मानब बेचबिखनविरुद्ध एक सय ९४ मुद्दा परेकामा २१ मुद्दा मात्रै फछ्र्यौट भएका छन् । राष्ट्रिय बालअधिकार परिषद्को आव २०७७/७८ मा जम्मा तीन हजार ६५८ बालबालिका हराएका र तीमध्ये ७६.७ प्रतिशत बालिका र २३.२ प्रतिशत बालक रहेका छन् । हराएकामध्ये जम्मा ८१.७ प्रतिशत बालिका मात्र फेला परेको देखिन्छ । बालक ८३.८ प्रतिशत फेला परेका छन् । हराएका बालबालिकामध्ये बालिका फेला पर्ने सम्भावना बालकको तुलनामा अत्यन्त न्यून देखिन्छ । राष्ट्रिय मानवअधिकार आयोगले मानव बेचबिखनको प्रभावकारी नियन्त्रण तथा रोकथामका लागि सम्बन्धित निकायले निर्वाह गर्नुपर्ने भूमिकाबारे सरकारसँग पटकपटक सिफारिस गर्दै आएका बुँदा कार्यान्वयनको हुन सकेका छैनन् । आयोगले २०७९ मा सरकारसँग मानब बेचबिखनविरुद्धका प्रयासका केन्द्रित सिफारिस २२ बुँदामध्ये एउटा मात्रै पूर्ण रुपमा कार्यान्वयन भएको तथ्याङ्कमा उल्लेख छ । अनुसन्धान ब्युरोका प्रहरी उपरीक्षक गौतम मिश्रले पछिल्लो समय मानव बेचबिखनविरुद्धका मुद्दा दर्ता बढ्दै जानु भनेको जनचेतना अभिवृद्धि भएको बताउँछन् । उनका अनुसार चेतनाकै कारण पीडितले प्रहरीसमक्ष आएर उजुरी दिनसक्ने भएका छन् । यद्यपि मानव बेचबिखनको अवस्था रोकथाम भने हुन सकेको छैन । “मुद्दा दर्ता सङ्ख्या बढ्नु एक अर्थमा सकारात्मक मान्नुपर्छ”, उनले भने, “यो भनेको पीडित सचेत हुँदै गएको सङ्केत हो । तर, हाम्रो प्रयास मानव बेचबिखन न्यूनीकरणमा नै ध्यान दिनुछ ।” सूचना प्रविधिको विकाससँगै छदमभेषीमा दलाल संयन्त्र फैलिएको छ । प्रविधिले विश्वव्यापी रुपमा सञ्जाल फैलाउन सूचना प्रविधिले सहज बनाएको उनको भनाई छ । ह्वाट्स एप, भाइबर, इमोजस्ता असङ्ख्य सञ्जाल अपनाएर विदेशबाट दलालले मानव बेचबिखनको माहोल बनाएका थुप्रै मुद्दा रहेको उनले सुनाए । “यस्तोमा पहिलो जस्तो अपराधी पत्ता लगाउन सजिलो छैन”, उनले भने, “त्यसैले सामाजिक सञ्जालमा नचिनेको अपरिचत व्यक्तिसँग विश्वास गरिहाल्नु हुँदैन भनी जनमानसमा जागरण ल्याउनुपर्छ ।” मिश्रका अनुसार स्कुलका बालबालिका लक्षित ‘अनलाइन’ शिक्षा दिन जरुरी छ । नेपाल प्रहरीको एक्लो प्रयासले भन्दा पनि स्थानीय सरकार र सङ्घसंस्थाको पहलले सचेना वृद्धि गर्न सजिलो हुने उनको धारणा थियो । शक्ति समूहकी संस्थापक अध्यक्ष चरिमाया तामाङले सूचना प्रविधिको माध्यमको प्रयोग सही ढंगले गर्न नजान्दा धेरै किशोरी दलालको चङ्गुलमा पर्ने खतरा बढ्दै गएको बताए । यसका लागि सरकारीस्तरबाटै जति सक्दो सुचना प्रविधिको प्रयोगमा जनचेतना दिने अभियान थाल्नुपर्ने उनको धारणा छ । “हामीले सामाजिक सञ्चाल र मोबाइल नचलाउन त भन्न सक्दैनौं तर, मानव बेचबिखनको डर हुन पनि सक्छ भनेर सचेत चाहीँ गराउन सक्छौं”, उनले भने । रासस

# नेवार, तागाधारी र मधेशी समूदायले मनाए गुँपुन्ही, जनैपुर्णिमा र राखी पर्व

भक्तपुर । श्रावण शुक्ल पुर्णिमाको अवसरमा गत सोमवार काठमाण्डौं उपत्यकालगायतका नेवार समुदायको बस्ती रहेको स्थानहरुमा गुँपुन्ही, तागाधारी पहाडी समुदायले रक्षाबन्धन, जनैपूर्णिमा तथा ऋषितर्पणी र मधेसी समुदायले दिदी बहिनीले दाजुभाईलाई हातमा राखी बाँधेर पर्व धुमधामले मनाएका छन् ।

सोमबार एकाबिहानै तागाधारीले नजिकको नदि, तलाउ, कुवा, पोखरी, कुण्डमा स्नानगरी जौ, तिल र कुशद्वारा ऋषिहरूलाई तर्पण गरी वैदिक रुद्राभिषेक पद्धतिबाट मन्त्रिएको नयाँ जनै (यज्ञोपवित) लगाईन्छ । वैदिक परम्पराअनुसार तागाधारीले लगाउने जनैलाई ब्रम्हसुत्र अथवा ज्ञानको धागो समेत भनिन्छ ।

जनैमा दुई शिखा हुन्छ जसमध्ये एउटा शिखाका तीन डोरालाई ब्रह्मा, विष्णु र महेश र अर्को शिखाका तीन डोरालाई कर्म, उपासना र ज्ञानको रुपमा लिइन्छ । जनै लगाउनेले माछा, मासु, मदिरा सेवन गर्न नहुने विधान रहेको छ ।

यसै दिन शरीर शुद्ध गरी देवता, अरुन्धतीसहित सप्तऋषिहरू कश्यप, अत्रि, भारद्वाज, गौतम, जमदग्नि, वशिष्ठ र विश्वमित्र र पितृलाई पनि तर्पण गरिने भएकाले नै जनैपुर्णिमाको दिनलाई ऋषितर्पणी समेत भन्ने गरिएको हो ।

यसदिन गुरु पुरोहितको हातबाट मन्त्रोच्चारणगरी तयार गरेको रक्षासुत्र डोरो बाँध्ने प्रचलन पनि रहेको छ। गुरु पुरोहितहरूले मानव रक्षाका लागि जप, तप र पूजा गरी तयार गरेको डोरो 'येन बद्धो बलिराजा दानवेन्द्रो महाबल तेन त्वां प्रतिबध्नामी रक्षेमा चलमाचल' मन्त्रोच्चारणका साथ यजमानहरुको हातको नाडीमा बाँधिदिने गर्दछ । यसरी डोरो बाँध्ने प्रचलनले यस दिनलाई रक्षाबन्धन पनि भनिन्छ ।

नेवार समुदायले भने पञ्चतत्व अर्थात होम गर्दा प्रयोग गरिने तत्व सहितको डोरो बाँध्ने प्रचलन रहेको छ । जसले भुत, प्रेत, पिशाच र मृत्युको भयबाट जोगाउने विश्वास गरिन्छ । विषेशत क्षेत्री बाहुनहरुले लगाउने डोरो र नेवार समुदायले लगाउने डोरो रक्षा गर्नकै निम्ति भएपनि नेवार समुदायमा तान्त्रिक विधिले डोरो तयार गर्ने र वैदिक विधिले बाँध्ने चलन रहेको संस्कृतिविद ओम धौभडेलले बताउँछन् । नेवार समुदायमा डोरो बाँध्दा बली राजाबाट रक्षा गरोस् भन्ने श्लोक वाचन गरि महिलाको बाँया र पुरुषको दायाँ हातमा डोरो बाध्ने गरिन्छ ।

यसै दिन कम्तीमा नौ प्रकारका विभिन्न गेडागुडीहरुको मिश्रण क्वाःती जसको नेपाली रुपान्तरण तातो झोल खाने प्रचलन रहेको छ। विशेषगरी एकादशीको दिन भिजाएर टुसा उम्रिएको गेडागुडीको परिकार क्वाःती खानाले शरीरमा ताप उत्पन्न हुने र वर्षायाममा लाग्ने चिसोको रोगबाट बच्ने, दुषित पानीका कारण लाग्ने रोगव्याधीले कमजोर पारेको शरिरलाई तागत दिने गर्दछ ।

नेवार समुदायको गुँपुन्ही

श्रावण शुक्ल पुर्णिमालाई नेवार समुदायले भने गुँपुन्ही पर्वको रुपमा मनाईन्छ । नेपाल सम्वत्‌मा गुँलाथ्व पारुदेखि त्रलाथ्व पारुसम्मको एक महिना गुँला अर्थात नवौं महिना हो । गुँलामा पर्ने भएकाले यसको नेपालभाषामा गुँपुन्ही रहन गएको र नवौं महिना भएकोले पनि नेवार समुदायले कम्तीमा विभिन्न नौ प्रकारका गेडागुडीको मिश्रण क्वाःती खाने गरेको हो ।

यही प्रचलन नेवार समुदायबाट विस्तार भएर अन्य समुदायले पनि यस दिन क्वाःती खाने प्रचलन चलेको हो । क्वाःती विशेषगरी मास, मुगी, केराउ, बोडी, चना, राजमा, सिमी, भट्‌मास, मकै, बकुलालगायत कम्तीमा नौ थरी गेडागुडीको मिश्रणबाट बनेको हुन्छ ।

रोपाईं र धान खेत गोडमेलको बेला तथा वर्षातको मौसम भएकाले तातो पोषणयुक्त आहारले शरिरलाई ताजगी बनाउने भएकोले पनि नेवार समुदायमा आहार विज्ञान अनुसार जनै पूर्णिमामा क्वाःती खाने प्रचलन रहेको संस्कृतिविद् प्रा.डा. पुरुषोत्तमलोचन श्रेष्ठले जानकारी दिए ।

'खाद्य विज्ञान र प्रकृतिको अनुपम मिलन नेवारी संस्कृतिमा रहेको छ । नेवार समुदाय मौसम अनुसारको चाडपर्व मनाउने र सोही अनुसारका खानेकुरा खाने गर्दछन यसको एउटा उदाहरण श्रावण शुक्ल पुर्णिमामा क्वाःती खाने प्रचलन हो,' उनले भने ।

भ्यागुताको पुजा

यसै दिन नेवार समुदायले वर्षा गराउन मद्दत गर्ने जीव भ्यागुतालाई पुज्ने प्रचलन रहेको छ। कृषकको मुख्य बाली धान लगाउने बेला पानी पार्न मद्दत पुऱ्याउने जीवको रुपमा भ्यागुतालाई लिने गरिन्छ । कृषकहरु प्राकृतिको पुजा गर्ने भएकोले मानव जीवनको सहयोगीको रुपमा भ्यागुतालाई विभिन्न परिकारका भोजन खुवाएर भ्यागुतालाई पुज्ने गर्दछन ।

वर्षा गराउने दुत तथा खेतबारीको शत्रु कीरा मारेर अन्न उब्जाउन सहयोग गर्ने प्राकृतिक देवताका रुपमा सिमिको पातमा चामल, रोटी, क्वाःती, मुलाको ऐना र विषेश प्रकारको सुपारीलगायतका खाद्य परिकार राखेर खेत खेतमा गई किसानहरुले भ्यागुतालाई पुजा गर्ने तथा भोजन गराउने परम्परा रहेको प्रा. डा. श्रेष्ठ बताउँछन । जसलाई स्थानिय भाषामा ब्याँचा जाः नक वानेगु भनिन्छ ।

मानिसको महान गुरुहरु मध्ये भ्यागुता पनि एक हो । त्यसैले यस दिन गुरुलाई पुज्ने अवसरको रुपमा लिई नेवार समुदायले भ्यागुता पुजा गरी धानबारीसम्म गई खाना खुवाउने प्रचलन बसेको उनको भनाई छ ।

भक्तपुरका विभिन्न कुण्डमा मेला

जनैपूर्णिमाको अवसरमा भक्तपुरका विभिन्न कुण्डहरुमा मेला लाग्ने गर्दछ । नगरकोटको महादेव पोखरी र भक्तपुरको औद्योगिक क्षेत्रभित्र रहेको प्राचिन धल्वा पुखुः (कालदह) मा बिहानैदेखि स्नान गर्ने भक्तजनहरुको घुइँचो लाग्ने गर्दछ ।

गोसाईंकुण्डको प्रतिक मानिने नगरकोटको महादेव पोखरीमा स्थानीय तामाङ झाँक्रीहरुको विशेष मेला लाग्दछ । यस दिन परम्परागत भेषभुषामा सजिएर डम्फु बजाउँदै नाच्दै पोखरीमा स्नान गर्ने प्रचलन रहेको संस्कृतिकर्मीहरु बताउँछन । जनैपुर्णिमाको दिन कुण्डहरुमा स्नान गरी महादेवको दर्शन गरे गुरुहरुको मन्त्र सिद्धी हुने विश्वास रहेको संस्कृतिकर्मी बताउँछन् ।

लोककथन अनुसार महादेवले कालकुट विष सेवन गरेपछि छटपटिएर गोसाईंकुण्ड जानेक्रममा नगरकोटमा बास बसेको धार्मिक विश्वासको आधारमा यस दिन सो कुण्डमा मेला लाग्ने गरेको अर्का संस्कृतिकर्मी प्रा. डा. पुरुषोत्तम लोचन श्रेष्ठले बताउँछन् । उनले ' गोसाईंकुण्ड जान नसक्ने भक्तजनहरुले यो कुण्डमा स्नान गरे गोसाईंकुण्डमा स्नान गरे सरह नै पुण्य प्राप्त हुने जनविश्वास रहेको बताए । त्यसैगरी गोसाईंकुण्डकै प्रतिक मानिने भक्तपुरको धल्वा पुखुः (कालदह)मा पनि बिहानैदेखि स्नान गर्नेको भिड लाग्दछ । यो दहमा स्नान गरी पोखरी छेउमा रहेको महादेव र दरवारस्क्वायरस्थित शिलु महादेव (फसी देगः) को दर्शन गरे गोसाईंकुण्ड गए सरह पुण्य प्राप्त हुने जनविश्वास रहेको पाईन्छ ।

यस दिन कालदहमा स्नान गरी महादेवको पुजाअर्चना गरे सुख, शान्ति र पुण्य प्राप्ति हुन्छ भन्ने धार्मिक विश्वास र मान्यता समेत रहेको छ । कालदहमा स्नानपछि भक्तजनहरु जनै फेर्ने र रक्षा बन्धनको प्रतिक हातमा डोरो बाँध्ने गर्दछन ।

मधेशी समुदायको राखी

यसै दिन मधेशी समुदायले दिदी बहिनीले आफ्ना दाजुभाइलाई प्रेमको प्रतिकको रुपमा हातमा राखी बाँधी दिने प्रचलन रहेको छ । यो पर्व तराईको मधेश र हाल उपत्यका र पहाडी क्षेत्रमा धुमधामले मनाईन्छ । मधेशी समुदायका दिदी बहिनीहरुले आ-आफ्ना दाजु भाईको दिर्घायुको कामना गर्दै रक्षा कवचको प्रतिक हातमा रंगीबिरंगी राखी बाँधिदिएर राखी पर्व मनाउने गर्दछ । दिदीबहिनीले दाजुभाईलाई नाडीमा राखी बाँधेर दीर्घायू तथा प्रगतिको कामना गर्दै आशिष दिने गर्छिन भने दाजुभाईले पनि सक्दो उपहार दिने प्रचलन छ ।

पछिल्लो समय यो संस्कृति काठमाडौं उपत्यकालगायत पहाडमा पनि बिस्तार भएको छ । आधुनिक प्रविधिको विकाससँगै एक समुदायको संस्कृति अन्य समुदायले पनि अनुसरण गर्ने क्रममा राखी बाँध्ने चलन मधेशी बाहेकका अन्य समुदायले पनि अनुशरण गर्न थालेको हो ।

राखी बाँध्ने संस्कृति दिदीबहिनी र दाजुभाईबीचको आपसी प्रेम, सद्‌भाव बढाउनुका साथै एक अर्कामा भातृत्वको भावना जागृत गराउने पर्व हो ।

पहाडी समुदायमा दाजुभाईको दिर्घायुको कामना गर्दै तिहारमा भाईटिका गरेजस्तै मधेसी समुदायमा राखी बाँध्ने संस्कृति रहेको संस्कृतिकर्मीहरु बताउँछन् । राखी बाँध्ने संस्कृति हाम्रै नेपालका मिथिलाञ्चल लगायतका तराई- मधेश क्षेत्रको संस्कृति भएकोले विस्तारै अन्य समुदायमा पनि यसको प्रभाव बढ्दै जानु सामाजिक सद्‌भावका लागि उत्तम भएको संस्कृतिकर्मीहरुको कथन छ ।

# नेक प्रति विद्यार्थीको आकर्षण, प्रवेश परीक्षामा उत्साहजनक सहभागीता

काठमाडौं । नेपालमै सर्वसुलभ शुल्कमा गुणस्तरीय इन्जिनियरिङ शिक्षा प्रदान गर्ने हेतुले स्थापित नेपाल इन्जिनियरिङ कलेज (नेक) ले नयाँ शैक्षिक सत्रका लागि लिएको प्रवेश परीक्षामा विद्यार्थीको उत्साहजनक सहभागीता रहेको छ । शनिबार चाँगुनारायण-४ भक्तपुरमा दिइएको पहिलो प्रवेश परीक्षामै कक्षा १२ पास गरेका विद्यार्थीहरुले उत्साहजनक सहभागीता जनाए ।

स्नातक तहमा इन्जिनियरिङ विधाका ६ वटा विषयमा लिइएको प्रवेश परीक्षामा देशभरबाट विद्यार्थीहरुले सहभागीता जनाएको कलेजका प्राचार्य सह प्राध्यापक दुर्गाप्रसाद भण्डारीले जानकारी दिए । ४८० कूल सिटको प्रवेश परीक्षामा झण्डै आधा सिटमा विद्यार्थीहरुले परीक्षा दिएका छन् । 'स्नातक तहका सिभिल इन्जिनियरिङ, सिभिल एण्ड रुरल, कम्प्युटर इन्जिनियरिङ, इलेक्ट्रोनिक्स एण्ड इलेक्ट्रिक, इलेक्ट्रोनिक्स एण्ड कम्युनिकेशन तथा आर्किटेक्ट विषयको प्रवेश परीक्षामा विद्यार्थीहरुको उत्साहजनक रुपमा सहभागीता रह्यो ।' विद्यार्थीहरुको उत्साहजनक सहभागीताले पनि नेपालमै सर्वसुलभ रुपमा गुणस्तरीय इन्जिनियरिङ शिक्षा पाउन सकिन्छ भन्ने विश्वास विद्यार्थीहरुमा देखिएको प्राचार्य भण्डारीले बताए ।

प्रवेश परीक्षाको निरिक्षणका लागि पोखरा विश्वविद्यालयका प्राध्यापक माधवप्रसाद कोइरालाले विश्वविद्यालयले पुराना पाठ्यक्रमलाई परिमार्जन गरेर नयाँ बनाइएकोले पनि विद्यार्थीहरुको आकर्षण बढेको बताए । कोभिड-१९ पछि विश्वविद्यालयले विद्यार्थीहरुलाई विश्वव्यापी प्रतिष्पर्धा गराउन पुरानो मोडल हटाएर नयाँ मोडलको पाठ्यक्रम तयार पारिएको जिकीर गरे । 'पोखरा विश्वविद्यालयबाट सञ्चालित धेरै विषयहरुको पाठ्यक्रमहरु चेन्ज गरेका छौं । नेपाली विद्यार्थीहरु विदेश नजाउन् स्वदेशमै अन्तराष्ट्रिय स्तरको शिक्षा दिनुपर्छ भनेर विश्वविद्यालय सचेत छ ।' प्राध्यापक कोइरालाले भने ।

प्रवेश परीक्षाको निरिक्षणमा आएका नेपाल इन्जिनियरिङ कलेज सञ्चालक समितिका अध्यक्ष तथा चाँगुनारायण नगरपालिकाका मेयर जीवन खत्रीले स्वदेशमै अन्तराष्ट्रियस्तरको इन्जिनियरिङ शिक्षा दिन सकिन्छ भन्ने कुरा नेपाल इन्जिनियरिङ कलेजले प्रमाणित गरेको बताए । पछिल्लो समय कक्षा १२ पास गर्ने वित्तिकै विद्यार्थीहरु विदेश गईहाल्ने गलत ट्रेन्डको विकास हुँदा देशमा युवा जनशक्ति अभाव हुनसक्ने चिन्तासमेत व्यक्त गर्दै कम्तिमा व्याचलर तहको अध्ययन नेपालमा गर्नुपर्ने जिकीर गरे । 'नेपालको इन्जिनियरिङ शिक्षा अन्तराष्ट्रिय स्तरको छ । हतारमा कुनै ज्ञान र सीप बिना विदेश जाँदा धेरै समस्याहरु आइपर्दछ । देखासिकी र लहडमा नजाऔं ।' नेपाल इन्जिनियरिङ कलेजमा अध्ययन गर्दा विद्यार्थीले धेरै फाइदा लिन सक्ने अध्यक्ष खत्रीले बताए ।

प्रवेश परीक्षामा सहभागिता जनाएका संखुवासभाका विद्यार्थी रञ्जन अर्यालले एआई, मसिन लर्निङ जस्ता नयाँ विषयहरु पोखरा विश्वविद्यालयको पाठ्यक्रममा रहेकाले नेपाल इन्जिनियरिङ कलेज छनौट गरेको बताए । 'यहाँ फुलटाइम फ्याकल्टी हुदो रहेछ । ल्याब, पुस्तकालय पनि अन्य कलेजको दाँजोमा राम्रो रहेछ । त्योसँगै आइटीका नयाँ टेक्नोलोजी एआई, मसिन लर्निङ जस्ता विषयहरु पनि रहेछ ।' कलेजले दिने छात्रवृत्ति पनि आफुलाई मन परेको विद्यार्थी अर्यालले बताए ।

सन् १९९४ मा मुनाफारहित सामाजिक शैक्षिक संस्थाका रुपमा सञ्चालित नेपाल इन्जिनियरिङ कलेजमा स्नातक तथा स्नातकोत्तर तहको अध्ययन अध्यापन हुने गरेको छ । कलेजमा विद्यार्थीको घुईंचो लाग्नुमा कलेजले हरेक वर्ष दिने आकर्षक छात्रवृत्ति पनि एक हो । प्रत्येक वर्ष कलेजले स्थानीय पालिका, वडा तहदेखि प्रादेशिक, सेमेस्टर टपर, कलेज टपर लगायत विभिन्न शिर्षकमा १५ करोड बराबरको छात्रवृत्ति दिईदै आएको जनाएको छ ।

गुणस्तरीय इन्जिनियरिङ शिक्षा प्रदान गर्दै आइरहेको यो कलेजलाई नेपाल इन्जिनियरिङ काउन्सिलले २०६० सालदेखि लगातार स्थायी अनुमति दिंदै आएको छ । काउन्सिलले हरेक वर्ष देशभर सञ्चालित कलेजहरुको शैक्षिक, भौतिक, प्राविधिक मुल्यांकन गरी स्थायी र अस्थायी अनुमति दिने गरेको छ । कलेजले अर्को प्रवेश परीक्षा केही समयमै सञ्चालन गर्ने बताएको छ ।

# भादगाउँले टोपी उद्योग संघको साधारण सभा सम्पन्न

भक्तपुर । घरेलु उद्योग प्रवर्द्धनमा सबै एक जुट हुनु पर्ने सरोकारवालाहरूले बताएका छन् । भादगाउँले कालो टोपी उद्योग सङ्घको प्रारम्भिक साधारण सभामा सरोकारवालाहरूले घरेलु तथा साना उद्योग प्रवर्द्धन गर्न सबै एक जुट हुनु पर्ने बताएका हुन् ।

भक्तपुरको मौलिक पहिचानको रूपमा रहेको भादगाउँले कालो टोपी उद्योग सङ्घले आफ्नो पहिलो प्रारम्भिक साधारण सभा सम्पन्न गरेको छ । उक्त कार्यक्रममा भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले घरेलु उद्योग, हस्तकलालगायतका उद्योगहरूले देशको आर्थिक विकासमा महत्त्वपूर्ण योगदान पुऱ्याइरहेको बताउँदै यसको प्रवर्द्धनमा हामी एक जुट भएर लाग्नु पर्ने बताउनुभएको थियो । उहाँले नगरपालिकाले यहाँका मौलिक तथा परम्परागत सीप तथा कलाहरू संरक्षण र प्रवर्द्धनमा विशेष पहल गर्दै आइरहेको बताउँदै भक्तपुर भ्रमण गर्ने स्वदेशी तथा विदेशी विशिष्ट पाहुनाहरूलाई भादगाउँले टोपी, जुः जुः धौ, मौलिक थैली र मयुरको झ्याल उपहार स्वरूप प्रदान गर्दै आएको बताउनुभएको थियो ।

यस्तै उहाँले भादगाउँले टोपीको गुणस्तर कायम गर्नुपर्नेमा जोड दिँदै घरेलु उद्योगहरूलाई प्रवर्द्धन गर्न नगरपालिका सधैं प्रतिबद्ध रहेको बताउनुभयो ।

यस्तै कार्यक्रममा भक्तपुर नगरपालिका वडा नम्बर ४ का वडाध्यक्ष उपेन्द्र सुवालले भादगाउँले टोपीको शानलाई अझ उच्च राख्न व्यवसायीहरूले निरन्तर यसको संवर्द्धन र प्रवर्द्धनमा लाग्नुपर्ने बताउँदै भक्तपुरका मौलिक वस्तुहरूको ट्रेडमार्क कायम गर्न सके अझ फलदायी हुने बताउनुभएको थियो ।

त्यस्तै भक्तपुर उद्योग वाणिज्य सङ्घका अध्यक्ष रोशनी मैयाँ धाख्वाले भादगाउँले टोपी प्रयोगकर्ताहरू कम हुँदै जाँदा व्यवसायीहरू निराश देखिएको बताउँदै भक्तपुरको मौलिक टोपी प्रयोग गर्न सबैलाई उत्साहित गर्नुपर्नेमा जोड दिनुभएको थियो ।

कार्यक्रममा भादगाउँले कालो टोपी उद्योगका सङ्घका अध्यक्ष सिताराम श्रेष्ठले देशकै पहिचान बोकेको भादगाउँले टोपीको प्रयोगलाई सरकारी कार्यालयका कर्मचारीहरूमा अनिवार्य गर्न सके यसको संरक्षणमा टेवा पुग्ने बताउनुभएको थियो ।

उक्त कार्यक्रममा सल्लाहकार विश्वराम दुवाल, भक्तपुर हस्तकला सङ्घका अध्यक्ष शम्भु श्रेष्ठ, भक्तपुर रेडिमेड व्यापार सङ्घका अध्यक्ष राजेन्द्रकुमार प्रजापतिलगायतले शुभकामना मन्तव्य दिनुभएको थियो भने प्रमुख अतिथि, अतिथिलगायत सम्पूर्णलाई सङ्घका उपाध्यक्ष रत्नकाजी छुँजुले धन्यवाद ज्ञापन गर्नुभएको थियो ।

# बिनायकमा वादविवाद प्रतियोगिता सम्पन्न

भक्तपुर । बालबालिका भित्रको अन्तर्निहित प्रतिभालाई प्रस्फुटन गराउने उद्देश्यले बिनायक शिक्षा निकेतन इङ्लिस स्कुलले भाद्र २ गते आइतबार ८ देखि १० सम्मका विद्यार्थीहरु बिच "वैदेशिक रोजगारले देश बिकास हुन्छ" भन्ने शिर्षकमा वादविवाद प्रतियोगिता सम्पन्न गरेको छ । उक्त प्रतियोगिता ८,९ र १० कक्षाका बिद्यार्थी बिच भएको थियो । वादविवाद प्रतियोगितामा १६ वक्ताहरुले आ-आफ्ना विचार प्रस्तुत गरेका थिए । निकै उत्साहजनक रुपमा सम्पन्न वादविवाद प्रतियोगितामा कृषा प्रजापती कक्षा ९ प्रथम, अमृता गोले कक्षा ९ द्वितीय र प्रतीक दुङ्गेल कक्षा ९ तृतीय भएका थिए ।

वादविवाद प्रतियोगितामा विद्यालयका सहायक प्रिन्सिपल प्रेम निरौलाले वादविवादको महत्व तथा यसले पढाइमा पुग्ने सहयोग तथा वादविवादले विद्यार्थीहरु तार्किक बनाउने बिचार राखेका थिए । साथै विद्यालयका माध्यमिक तह संयोजक शैलेन्द्र कुमार भट्टराईले विद्यार्थी जहिले पनि सृजनशील हुनुपर्ने, सृजनशील बिद्यार्थी नै जीवनमा सफल हुने बताए । कार्यक्रमलाई कक्षा १० का छात्राहरु अमृता गोले तथा नेहा श्रेष्ठले संचालनका क्रममा यस्ता कार्यक्रमले हामी विद्यार्थीहरु सृजनशील हुने र तर्क बितर्क र खन्डन मण्डन गर्ने क्षमतामा अभिबृद्धि हुने भएकाले पढाइमात्र होइन वास्तविक जीवनमा समेत धेरै मद्दत पुग्ने भएकाले यस्तो कार्यक्रम निरन्तर गरिरहने बिनायक शिक्षा प्रति कृतज्ञता व्यक्त गरे ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### नेपालको पहिचान बचाउन लागि परौं !

नेपाल बहुभाषिक, बहुसांस्कृतिक र बहु सम्प्रदायको बसोबास भएको सानो मुलुक हो। यहाँको माटोमा समेत बहुआयामिक विविधता रहेको छ। साथै नेपालमा एकै समय तिथीमा पनि नेपालमा रहेका विविध सम्प्रदायका मानिसहरुले आफ्नै मौलिक परम्परा अनुरुप चाड पर्व मनाउने गरिएको तथ्य सबैमा विदितै छ।

तर नेपालमा लोकतान्त्रिक गणतन्त्र स्थापनाका पछिल्ला दिनहरुमा पनि विगतका शासन व्यवस्थामा कायम रहेका एकल सोच विद्यमान रहेको छ। अहिले पनि देशमा एउटै भाषाको बोलवाला रहेको छ। सार्थ साँस्कृतिक र अन्य क्षेत्रमा समेत एकै जातिले मान्ने पर्व जात्रालाई राष्ट्रिय चाडको मान्यता दिइने गरेको छ। त्यस्तै गरी देशमा स्थापित भएका राष्ट्रिय सांस्कृतिक सम्पदाहरु जुन देशमा मात्र होइन विदेशमा समेत फैलिएको सांस्कृतिक पहिचानको नामहरु खसकरण गर्दै तिनलाई ती एकल वर्गकै सम्पदाको रुपमा चिनाउन राज्य सयन्त्र लागेको देखिन्छ। यसरी विविधि भाषाभाषी, सम्प्रदाय र सांस्कृतिक मूल्यमान्यता रहेको यो सानो देशमा एकल भाषिक, जातिय र सांस्कृतिक पहिचान कायम गर्न खोज्ने प्रवृति हिजो पनि थियो र आज पनि कायम रहेको छ। तर आज एक कदम अगाडि बढेर कसैले पहिचानको नारा उठाएमा त्यसलाई साम्प्रदायिक हिंसा फैलाउने र राज्यमा द्वेष फैलाउन खोजेको आरोप लगाउने गरिएको छ।

यी त भए राज्य पक्षका कुरा। हामी आफै पनि आफ्नो राष्ट्रिय भाषा, पहिचान र संस्कृति प्रति बोझ बन्दै गइरहका छौं। हामीहरु विदेशी संस्कृतिको देखासिक ीगर्ने गर्दछौं। अनि आफ्नो मौलिक पहिचान प्रति हेय भाव राख्ने गर्दछौं। त्यसमाथि हामीहरु आफै पनि मौलिक नामहरु विगारेर नेपाली भाषामा रुपान्तर गर्ने कार्यमा अगाडि छौं। हामी आफै आफ्नो मौलिक नामलाई अरुलाई बुझाउन र अरुलाई चिनाउने र व्याख्या गर्ने नाममा अनुवाद गर्ने कार्यमा अगाडि देखिएका छौं। सामान्यता व्याकरण अनुसार कुनै पनि नामहरुको स्वरुप परिवर्तन हुँदैन। त्यसले स्थान, नामलाई मात्र बुझाउने गर्दछ।

आज देशमा रहेका मौलिक नामहरु, सम्पदाका नाम, स्थान र मठमन्दिर, पाटी पौवा र पोखरीहरुको नामसमेत खसकरण बनिसकेको अवस्था छ। जसलाई परिवर्तन गर्न अब सायद गाह्रो होला। तर पनि हामीले आफ्नो भाषा अनुरुपको नामहरु दैनिक जीवनमा प्रयोग गर्ने गरौं। जुन आज पनि हाम्रो जनजिब्रो झुण्डिएको छ। त्यसलाई खसकरण र रोमन करण गर्ने काम बन्द गरौं। किनकी पहिचानले नै मानव इतिहास, मानवीय जनजीवनको विकासक्रमसँगै मानव विकासको श्रृङ्खला अध्ययनमा टूलो भूमिका रहकों छ। त्यसैले देशमा रहेको विविध जातजातीको सांस्कृतिक तथा स्थान नामहरु रुपान्तरण गर्ने भन्दा स्थानीयतालाई नै प्रयोग गरी नेपालको पहिचान बचाउन लागि परौं।

# हनुमन्ते खोला : हिजो, आज र भोलि

● कृष्ण प्रजापति

रत्नाचुर पर्वतको नामले प्रसिद्ध हाल नगरकोट कहलिएको महादेव पोखरी क्षेत्रबाट सुरु हुने हलाहल र चम्पा नदीसंगै अन्य तीन नदीबाट बनेको महादेव खोला हनुमन्ते कुनै बखत अति निर्मल, स्वच्छ र कलकल पानी बहने सदाबहार नदी थियो। ठाउँ ठाउँमा बस्ती बिस्तार, बस्तीको फोहर नदीमा फाल्ने लगायत ढल निकास समेत नदीमै सीधा मिसाएपछि सुन्दर नदी ढलमा परिणत भएको छ। अहिले पनि मानव बस्ती सुरु हुनु भन्दा अलि माथि महादेव खोला कै नामले चिनिने गोसः पुल सम्म लुगा धुन सम्म मिल्ने खालको सङ्लो पानी नै बगिरहेको पाइन्छ। तर महादेव खोलाको पानी बस्ती सुरु हुने स्थान ब्रम्हायणी देखि तल बगे संगै ढल निकास मिसाएका कारण हनुमन्ते खोलाको रुप निकै बिग्रिएको देखिन्छ।

सुरुमा महादेव पोखरी रहेको क्षेत्र वा नगरकोट डाँडाको नामले प्रसिद्ध रत्नाचुर पर्वतबाट बगेर आउने पानी पूर्वमा टुकुचा हुँदै काभ्रे जिल्लातिर र पश्चिममा भने हलाहल र चम्पा नदी भएर मणिकणिका घाट पुग्ने गर्दछ। मणिकणिका घाट बीर, भद्रा र तमासा गरी तीन नदीहरु सहित हलाहल र चम्पा नदी मिसिएर आउने संगम स्थल हो। सुडाल र बागीश्वरीको बीच बगरबाट बहने चम्पा नदी र तेलकोटबाट आएका तीन नदी मिसिने ठाउँमा परापूर्व कालदेखि नै दसनामी समुदाय गिरी, पुरी, भारती र बन समुदायको दाहा संस्कार गर्ने चलन थियो। दशनामी सन्यासी समुदायले पहिला मान्छे मर्दा उक्त स्थानमा आफ्नो निजी जग्गा हुँदासम्म निजी जग्गामा नै लगेर लाश गाँढ्ने चलन थियो। हाल आएर ती सबै समुदायहरुले बाध्य भएर मणिकणिका घाटमा लगेर लाश जलाउने चलन सुरु गरेको छ। त्यहाँ लाश जलाउन ल्याउनेहरुलाई निःशुल्क दाउराको बन्दोबस्त गरिएको छ।

दशनामी समुदाय मध्ये पनि पुरी वर्गको जुना अखडा नेपालमा सोही मणिकणिका घाटमा मात्रै स्थापना गरिएको छ। काशि बनारसमा केन्द्र रहेको उक्त सन्यासी समुदायको अखडा झापाको गौरीगञ्जमा स्थापना गरिएको गिरी दशनामी समुदायको अखडा पछिको पहिलो हो। मणिकणिका घाटमा प्रत्येक महिना चौथो बिहिबार तुलसीकृत रामायण बाचन हुने गर्दछ। प्रत्येक दिन आरती पूजा र हवना, हरितालिका तीजमा भागवत बाचन, पितृ कार्य तथा बालाचतुर्दशी र शिवरात्रीमा ठूलो मेला नै लाग्ने गर्दछ। सो मेला र भागवत बाचनको कार्य ३६ वर्ष अगाडिदेखि निरन्तर चलिरहेको २०५४ सालदेखि उक्त घाटको संरक्षक रहनु भएका कल्याणपुरी महाराज बताउनु हुन्छ। २०५२ सालदेखि उक्त स्थानमा हालसम्म दैनिक रुपमा रामायण भजन गाउने चलन रहेको श्री रामायण भजन मण्डल तथा मणिकणिका घाट सुधार संघका संस्थापक अध्यक्ष बलराम काफ्ले बताउँछन्। हाल सो घाटमा पुग्ने राम्रो बाटो बन्न गइरहेको पनि छ।

मर्दा मान्छे पोल्ने सामान्य बगर रहेको उक्त स्थानमा केही सुधार गर्ने कार्यको प्रारम्भ २०५२ सालमा भएको थियो। पहिलो पल्ट उक्त स्थानमा मणिकणिकेश्वर महादेव स्थापना गरी भजनलाई निरन्तरता दिने कार्य भयो। हाल नयाँ ठूलो मन्दिर निर्माण गरी मणिकणिकेश्वर महादेव प्रतिष्ठापनको लागि प्रयास भइरहेको छ। २०५४ सालबाटै धुमि बाल्ने चलन गरेर दैनिक हवल कुण्डमा अखण्ड वत्तीको ब्यवस्था गरिएको छ। रामायण भजन पाटी भनेर चिनिने ढुंगे पाटीसंगै हाल ब्यवस्थित भजन गृह समेत निर्माण भएको छ। हालसालै गुरुकुलको रुपमा पनि प्रयोग गरिरहेको भवनलाई अशक्तहरु आएमा राख्ने घाट अस्पतालको रुपमा पनि प्रयोग गर्ने गरी उक्त घाटको दक्षिणपूर्वी भवनलाई बृद्धाश्रमको रुपमा पनि विकास गरिएको छ।

उक्त स्थानसम्मको नदीको पानी स्वच्छ र नदीको पानीमा माछाहरु खेलिरहेको पनि नांगो आँखाले देख्न सकिन्छ। वरपर वन, जंगल र खुल्ला ठाउँ पनि प्रशस्तै रहेकाले सो स्थान हेर्न लायक स्थान पनि हो। समितिको २८।२९ रोपनी जग्गा भित्र हाल दुईवटा मूर्दा पोल्ने दीपको बन्दोबस्त गरिएको छ। थप पाँचवटा निर्माणाधिन अवस्थामा रहेका छन्। घाटलाई अझ सुन्दर बनाउने क्रममा २०६४ सालमा त्यहाँ लखलख महादेव भनेर ६४ शिवलिंग बनाएको छ। संगै हवन कुण्ड रहेको छ। हनुमान, सप्तर्षि ऋषि लगायत नारायण कुन्दलको सुन्दर आकृतिहरुले उक्त घाटमा आउने दर्शकहरु तानिन्छन्। ती सबैको बाबजुट चित्तामा मान्छे पोलेपछि पानीले सफा गर्न मिल्ने गरी सो चित्तालाई खोलातिर फर्काएर निकासको समेत बन्दोबस्त गरिएको छ। हाल त्यहाँ बत्ती र खानेपानीको राम्रो ब्यवस्था छ।

मर्दा मान्छे पोल्ने मरण घाट भनिने उक्त मणिकणिका घाटको नाम कसरी रहन गयो भन्ने विषयमा कल्याणपुरी महाराजको भनाई यस्तो छ। कुनै बखत शंकरले कालकुट विष सेवन गर्दा असह्य भएर महादेव पोखरी भनिने हालको पोखरीमा दुबेछ। तैपनि आफूलाई सहज नभएपछि कैलाश पर्वतमा जाने क्रममा यस बीर, भद्रा, तमासा, हलाहल र चम्पा नदीको संगम स्थलमा आएर नुहाउने क्रममा उनको कानको मणिरत्न कुन्दल त्यहाँ खसेछ। सोही बेला देखि उक्त धामको नाम मणिकणिका धाम भएछ। यस पवित्र स्थानको बारे नेपाल महात्म्यको हिमवत खण्डमा उल्लेख गरेको छ।

ख्वपका नेवाः समुदायमा खुजः कुलां भनेर चिनिने सुडाल, बागीश्वरी, नगरकोट र छालिङ्गको दोसाधबाट बहने उक्त महादेव खोल सुधारको लागि सोही स्थानदेखि कार्य थाल्नु पर्ने देखिन्छ। महादेव खोलाको सुधारको लागि चाँगुनारायण नगरपालिकाले महादेव खोला सुधारको बृहत्त गुरुयोजना पनि बनाएको छ। उत्तरकाशि धाम भनेर पनि चिनिने सो स्थानबाट अलि तल आएपछि ठाउँ ठाउँमा खेती गर्नको लागि नहर बनाएर राजकुलोहरु निर्माण गरिएका छन्। महादेव खोलाको पानीलाई बिक्रम संवत १९९६ सालतिर मुहानपोखरीबाटै फलामे पाइप बिछ्याएर जुद्धशमशेरको पालादेखि निरन्तर बासबारीको रिजर्भ टैंकी भरेर भक्तपुर नगर पुयाई तत्कालीन जुद्धधारा मार्फत् पानी ख्वाइराखेको देखिन्छ। सो कार्यलाई भने हाल काठमाडौं उपत्यका खानेपानी लिमिटेड केयूकेएलले निरन्तरता दिइरहेको छ।

मणिकणिका धामबाट बगेर आउने पानी मूलसाँघु भएर ब्रम्हायणी पुग्दासम्म केही मात्रामा फोहर भैसक्छन्। कारण मूलसाँघुदेखि गोसः पुल सम्मको बगरमा पहिला फराकिलो बाटो नहुँदा सम्म पम्पले पानी तानेर खेती गर्ने र ईट्टा भट्टाको लागि पानी तान्ने मात्रै गरिन्थ्यो। अहिले सडक फराकिलो पारेर २०७२ सालको भूकम्पमा नगरमा भत्किएका घरहरुको भग्नाबशेषलाई सो नदीको किनारमा बिछ्याएर गाडी तथा ट्याक्टरसम्म जान मिल्ने गरेपछि भने मरेका कुकुर, मरेका कुखुराहरु, घरको नकुहिने प्लाष्टिकका सामग्री लगायत अनेकौं थरीका फोहर फाल्ने सुरक्षित डम्पिङ्ग साइटको रुपमा उक्त स्थान परिणत भएको छ। वातावरण संरक्षण मञ्चले २०८० सालको बैशाख ११ गते डिभिजन वन कार्यालयको सहयोगमा गोसः पुलदेखि मूलसाँघु सम्मको नदी सफाई कार्यक्रमको क्रममा उक्त स्थानबाट शिशाका बोरा, चप्पलका बोरा, मरेका कुखुराहरु सहितका बोराहरु तथा अन्य नकुहिने फोहरहरु समेत एक ट्रक जम्मा पारेपछि उक्त कुरालाई पुष्टि गरेको थियो।

भक्तपुर नगरका नेवाः समुदायले परापूर्व कालदेखि शहर भन्दा अलि पर दीप बनाएर मूर्दा पोल्ने क्रममा कालगतिले मरेका परिवार जनको अत्यष्ठि ब्रम्हायणी घाटमा ल्याएर गर्ने गरेको पाइन्छ। नवदुर्गाको देवगण सृष्टि हुने ब्रम्हायणी कुण्ड जस्तो पवित्र स्थानमा अहिले खड्गी, मानन्धर र साधारण किसान जातिले चलाउने गरी उक्त स्थानमा तीन वटा दीपहरुको बन्दोबस्त गरिएका छन्। सो स्थान सम्म आइपुग्दा केही मात्रामा पानी धमिलो हुने गरेको देखिन्छ। तीस चालिस वर्ष अगाडिसम्म निकै धेरै मात्रामा माछाहरु पाउने गरेको सो खोलामा हाल पटक्कै माछाका भुराहरु भेटिन्दैनन्। खेतबारीमा विषादीको प्रयोग र किटनाशक औषधी सहित रासायनिक मलको अत्यधिक प्रयोगले माथिबाट स्वच्छ पानी बगेर आएपनि ब्रम्हायणी मन्दिर किनारसम्म पुग्दा पानीमा निकै धेरै रासायनिक मिश्रण भइसक्ने भएकाले पनि यो अवस्था सिर्जना भएको हो।

ब्रम्हायणी पुलसंगै चोखा, दुगुरे प्लानिङ्गको ढल मिसाइएको देखिन्छ। त्यसपछि बिस्तारै नदी दुर्घन्धित हुन थाल्छन्। वर्षाद्को बेला अत्यधिक पानी बग्ने भएर केही गन्धको आभास नभएपनि ब्रम्हायणीदेखि माहेश्वरी सम्म पुग्दा ठाउँ ठाउँमा बस्तीको पानी सीधै खोलामा मिसाएको देखिन्छ। त्यसबाट पनि खोला अत्यन्तै फोहर बन्न पुगेको हो। हाल सम्म पनि गोसः पुलको माथि मूलसाँघुसम्म हिडेर दुल्ने हो भने कयौं खालका घना जंगल भित्र मात्रै पाउन सकिने खालका लामपुछ्रे चरा, विभिन्न जातिका जंगली पक्षी र सुतुरमुर्गहरुलाई भेट्टाउन सकिन्छ। यस्तो सुन्दर महादेव खोला हनुमन्ते खोलाको संरक्षणको लागि बस्तीबाट आउने फोहर ढललाई अन्यत्र पठाउनु जरुरी देखिन्छ। त्यसको लागि कसले पहल गर्ने भन्ने सवाल छ।

हाम्रा पूर्खाले नदी वरपर नै बस्ती सुरु गरेर नदी सभ्यतालाई संरक्षण गरेका थिए। आज भन्दा चालिस वर्ष अगाडि सम्म ब्रम्हायणी, माहेश्वरी जस्ता घाटमा आइमाईहरु लुगा धुने गर्दथ्यो भने कतिपयले गाई भैंसीलाई आहालको रुपमा जिउ सफा गराउन र पानी ख्वाउन महादेव खोलाको पानी नै प्रयोग गर्ने चलन थियो। तर हामी भने नदी नै फोहर पारेर आफूले आफैलाई गन्हाउने बनाइरहेका छौं। त्यसरी नदी सफा भएकै कारण माहेश्वरी घाटमा मान्छे मर्दा पर्दा कपाल खौरने दुब्यंके फल्चाको निर्माण गरी चोख्याउने चलन रहेको हुनु पर्दछ। साथै हनुमानघाट ख्वँह्नमा पनि विविध खालका धार्मिक एवं सांस्कृतिक क्रियाकलापहरु हुने गरेको हुनु पर्दछ। कयौं पुस्ता अगाडि नै देशका ९९ वटा घाट मध्ये पनि एउटा प्रमुख घाटको रुपमा हनुमान घाटले ठाउँ ओगटेको थियो। कुनै बखत हनुमान घाटमा बाल्मिकी ऋषि जस्ता रामायण लेख्ने ऋषिको पनि आगमन भएको देखिन्छ। हाल उक्त घाटको छेऊमा बाल्मिकी ऋषिको समाधिस्थल वा पुरिएको स्थानको रुपमा बल्मिकेश्वर महादेव स्थापना गरिएको पाइन्छ।

सिपाडोलतिरबाट अत्यन्तै छँगछंगिएर आउने क्रोधित बीरा नदी, खुजः कुलांतिरबाट शान्त भएर बिस्तारै बहँदै आउने भद्रा नदी बीच त्यही दुलो भित्रबाट पानी निस्केर आउने तमासा वा ख्वँ रह फेदबाट आउने मूलबाट सुरु हुने नदी मिलेर हनुमान घाट त्रिवेणी हुने गर्दछ। परापूर्व कालमा राम र रामभक्त हनुमान संगै एउटै पातमा भोजन गर्न बाध्य भएछन्। सोही बखत आफ्नो मालिकलाई आफ्नो जुठो कसरी ख्वाउने भनेर ख्वामितको मर्यादा राख्नको लागि हनुमानले पछाडि पुच्छरबाट जमीन खनेर पानी निकाली मूल फुटाएर हात धुने गरेको भन्ने जमीन भित्रबाट बहने मूलको पानी भने अहिलेसम्म पनि हनुमान घाट त्रिवेणीमा प्रत्यक्ष देख्न पाइन्छ।

माघ महिना भर तीलमाधव नारायणको मेला लाग्ने उक्त स्थानमा सो त्रिवेणीमा रहेको मूल फुटेर आउने तमासा नदीको पानीमै दिनहुँ जसो अहिले भक्तजनहरु प्रत्येक बिहान टाउको मात्रै बाहिर निकालेर पानीमा दुब्ने गर्दछन्। पुरुष ब्रतालुहरु त्यसरी धर्मको नाममा पानीमा दुबिरहनको लागि ठाउँ ठाउँबाट गुल्टँदै त्यहाँ पुग्ने गर्दछन् भने महिलाहरु पनि सो त्रिबेणी रहेको स्थानमै बिहान नुहाएर पवित्र बनी दिनको एक छाक मात्रै चोखो भएर खाइकन चप्पल सम्म नलगाई एक महिनाको कठीन ब्रत बस्ने चलन यद्यपि छँदैछ। कुनै बखत मल्ल राजवंशका दुई राजकुमारहरु समेत उक्त कठीन ब्रत बस्न आएको इतिहासमा देखिन्छ। माघ महिनाभर प्रत्येक दिन राजोपाध्याय बाहुनले बोकेर तीलमाधव नारायणको मूर्तिलाई त्रिवेणीमा स्नान गराउन ल्याउने र पूजापाठ गराउने चलन छ। अरु बेला भने उक्त मूर्ति कर्माचार्यहरुको गुथिले सुरक्षित राख्ने गर्दछन्। उक्त गुथिको अभिलेख र मूर्तिको बनौटले पनि साँखुमा लाग्ने साली नदीको माधवनारायण मेला भन्दा पनि पहिले देखि भक्तपुरको हनुमानघाटमा उक्त तीलमाधवनारायणको मेला लाग्ने चलन रहेको प्रमाणित हुन्छ।

लिच्छवि कालमा हनुमान घाटलाई खुसि बिहारको नामले चिनिन्थ्यो। उक्त स्थानमा हालसम्म पनि लिच्छविकालीन बहाः बहीको अस्तित्व रहेको पाइन्छ। पछि हनुमानको मूर्ति स्थापना संगै उक्त स्थानको नाम हनुमान घाट रहन पुगेको हो।

बाँकी पेज ६ मा

# ललितपुरमा न्यकू जात्रा अर्थात मतया:

ललितपुर । ललितपुर नगरको गल्ली गल्ली चोकचोकभित्र समेत पुगी करिब २००० देवी देवतालाई धूप, दियो, कपुर, पैसा, मिठाईलगायत सामग्री चढाउँदै गरिने कठिन परिक्रमा न्यकू जात्रा मतया:को सम्पूर्ण तयारी पूरा भएको जानकारी दिन बिहिबार पत्रकार सम्मेलन आयोजना गरिएको थियो ।

सो पत्रकार सम्मेलनमा जानकारी दिए अनुसार यो वर्ष भदौ ५ गते अर्थात आज भाद्रकृष्ण गुंलागा द्वितीयाको दिन नगरको चार दिशामा रहेको चार वटा थूर (अशोक स्तुप) परिक्रमाको क्रमलाई आधार बनाई बौद्ध धार्मिक स्थलहरु देवालय, चैत्य, धर्मधातु, बागीश्वर परिक्रमा (लगभग १२ घण्टा लाग्ने) गरिने छ । यात्रा विहानै ४ बजे शुरु हुनेछ ।

श्रद्धालु भक्तजनहरु नकबहिलमा भेला भइ यहीँबाट थालिने यस यात्राका क्रममा पथ प्रदर्शन बज्राचार्य पुरोहित रहने गरेको छ भने सहभागीको अन्तमा आयोजक क्षेत्रको त्वा:म्ह: (टोलका नाइके) ले निस्ला (पिण्डपात्रमा चामल, पैसा) तथा निस्लापा: (चिउरा, अदुवा, मिठाई) चढाउने परम्परा छ । सहभागीहरुको मध्यमा महादेवको उपस्थिति रहने परम्परा छ ।

चन्द्रमास अनुसार नवौं महिना गुँलाभरी विभिन्न बौद्ध धार्मिक परम्पराहरु संचालन हुने गरेको छ, जसमध्ये करिब ८५० बर्ष अघि लिच्छिवी राजा बालार्चन देवले जेष्ठवर्ण महाविहार तंगबहा: स्थापना गरेको उपलक्ष्यमा ललितपुर नगरमा शुरु गरेको मतया: अर्थात दीपयात्रा परम्परा नेपालकै अद्धितीय अमूर्त सम्पदा मानिन्छ ।

कुम्भेश्वरमा नवबाजा बजाइ प्रारम्भ हुने मतया: बौद्धकथामा आधारित भएपनि शिव र शिवगणको अनिवार्य उपस्थिति रहेको छ । विशेषत: परिवारजनको निधनबाट शोकमा परेकाहरुको सहभागिता रहने यस यात्रामा श्रद्धाभावले जोकोही सहभागी हुन सक्छन् । आयोजना तथा सहभागिताको दृष्टिकोणले समावेशी यो पर्वलाई कूशल एवं अनुपम संस्कृति मान्ने गरिन्छ ।

भगवान बुद्धको ध्यान भङ्ग गर्न आएका स्कन्धमार, मृत्युमार, देवपुत्रमार, क्लेशमार, अभिसंस्कारमारमाथि विजय प्राप्त गरी बुद्धत्व प्राप्त गरेपछि ती मारहरु भगवान बुद्धकै शरणमा गएको सापारुको भोलीपल्ट शरणस्वरुप श्रद्धाभावले गरिने यस यात्रा परम्परामा अजिव भेषभूषा एवं शैलीमा ख्याल: अर्थात हास्य व्यङ्गात्मक प्रस्तुत गर्दै सहभागी हुने समूहहरु पनि हुन्छन् भने टोलटोलबाट बाजागाजा सहित समूहहरुको सहभागिता पनि रहन्छ ।

वाद्यवादन यस परम्पराको अर्को विशेषता हो । वाजा एवं वादन शैलीको अनुपम नमूना नवबाजा (धिमे, नायिखं, क्वँचाखिं, मग:खिं, नगरा, ढोलक, मृदङ्ग, झ्याँकी बाजा, जोरानगरा, दह ब्याबाजा, खँजरी, दबदत, धा:, दमोखिं, नेकू, तिक्ली तथा पयताखिं) बाजा बजाउने गरिन्छ । यी बाजाहरु मध्ये धा:, न्यकू, दमोखिं, प्रमुख हुन् भने नेकू अर्थात सिङ बाजा (फुकेर बजाउने) कै नामबाट यस जात्रालाई न्यकू जात्रा अर्थात श्रृंगभेरी जात्रा भन्ने गरिएको हो ।

करिब ४०० बर्ष अघि भने मल्ल राजा सिद्धिनरसिँह मल्लले देशमा छाएको माहामारी तथा हाहाकार अन्त्य गर्न राजगुरु बौद्ध बज्राचार्यहरुसँग सल्लाह गरी १० वटा टोलहरुले पालैपालो संचालन गर्ने जिम्मेवार ीसहित नवबाजा बजाएर नगर परिक्रमाको चलनसहित थप व्यवस्थित गरेका थिए ।

यस पर्वको सन्दर्भमा निम्न कथन रहेको छ । शशिपटन देशकी रानी सुलक्षणाले आफ्नो पति राजा सिंहकेतु मृत्युपश्चात् राँगोको रुपमा जन्मिएको तथा सो अवधिमा रानी सुलक्षणा सोही राँगो पालिराखेको घरमा ब्राम्हण पुत्रीका रुपमा जन्मिएकी थिइन् । उनले आफ्नो पूर्वजन्मको पति नै यो जन्ममा राँगो भइ जन्मिएको थाहा पाइन् । पछि राँगोको मृत्यु पश्चात दुई वटा सिङमध्ये एउटा नदी किनारमा गाडेर सो स्थानमा चैत्य निर्माण गरेको तथा अर्को सिङको बाजा बनाई सो बाजा (फुकेर) बजाउँदै चैत्य परिक्रमा गरेको उल्लेख छ । सिङलाइ नेपालभाषामा न्येकु भन्ने गरिन्छ । केही समय पश्चात उनकी पति सिँहकेतु राजा धर्मशिलका नामले प्रकट भएको मानिन्छ ।

न्यकू जात्रा अन्तर्गत नवबाजा प्रदर्शन तथा बोगी यात्रा सम्पन्न भइसकेको छ भने भाद्र २ गते साँझ ६ बजे कुम्भेश्वरमा नवबाजा प्रस्तुति पश्चाथ, भाद्र ५ गते नकबहिलमा भेला भइ विहान ४ बजे मतया: (दीपयात्रा) आरम्भ हुने गर्दछ । यही दिन विहान ११ बजे नकबहिलमै पूधा: बाजा निकाल्ने तथा दिउँसो १ बजे पाटन दरवारमा नवबाजा प्रस्तुति, भाद्र ६ गते विहान ११ बजे भेला भइ बुंगमतीमा नवबाजा बजाउने, भाद्र ७ गते विहान ११ बजे नकबहिलमै भेला भइ स्वयम्भूमा नवबाजा बजाउने, सोही दिन साँझ ५ बजे गणेशपूजाको निमन्त्रणा तथा सूचना प्रवाह गर्ने परम्परा - नायिखं च्वयेकेगु, भाद्र ८ गते शनिवार दिउँसो १२ बजे नकबहिलमै भेला भइ गणेशपूजा (यात्रा) गर्ने, भाद्र ८ गते नै साँझ ७ बजे पुरस्कार तथा सम्मान अर्पण, पालो हस्तान्तरण तथा समापन कार्यक्रम हुनेछ ।

# ललितपुरको छम्पीमा भैरवको ख्वापा:सहितको आर्ट भिलेज



काठमाडौँ । ललितपुर गोदावरीको छम्पीमा भैरवको ख्वापा: (मुखाकृति)सहितको 'नेपाल आर्ट भिलेज' निर्माण हुने भएको छ । पञ्चधातु प्रयोग गरी निर्माण गरिने भैरवको ख्वापा: ७२ फिट अग्लो, ५८ फिट चौडाइ र ६५ टन तौलको हुने र उक्त ख्वापा: विश्वकै ठूलो हुने परियोजनाका संस्थापक सदस्य एवं प्रवक्ता रुपकमान महर्जनको दाबी छ ।

ख्वापा:लाई पाँच तलाको आरसिसी भवनमा फ्रेम बनाएर एसेम्बल गरिनेछ । भवनको अगाडिपट्टि ख्वापा: र भवनमा कला सङ्ग्रहालय स्थापना हुनेछ । कूल २३८ रोपनी क्षेत्रफलमा फैलिने परियोजनाको पहिलो चरणमा ५२ रोपनी क्षेत्रमा भैरवको ख्वापा: तथा अन्य सम्पदा र १८६ रोपनी क्षेत्रफलमा कलाग्राम रहनेछ ।

"भैरवको ख्वापा:को अवलोकनसँगै भैरवसँग सम्बन्धित जानकारी अध्ययन गर्न पाइनेछ", प्रवक्ता महर्जनले भने, "भवन परिसरमा भगवान् गणेशका १६ प्रकारका मूर्ति तथा ६४ वटा विभिन्न भैरवका मूर्ति समेत राखिनेछन् ।" मुखाकृतिको ४२ फिटको उचाइमा भएको भैरवको आँखा (भैरवदृष्टि) बाट काठमाडौँ उपत्यका तथा मनोरम हिमशृङ्खलाको अवलोकन गर्न सकिने जनाइएको छ ।

ख्वापा: परिसरमा विभिन्न समुदायको रैथाने परिकार उपलब्ध हुने भोजनस्थल तथा सभा कक्ष निर्माण गरिनेछ । परम्परागत जीवनशैली झल्काउने देवीदेवताका मठमन्दिर, ढुङ्गेधारा, पोखरी र बगैँचा जस्ता भौतिक कलायुक्त सम्पदा, प्रदर्शनी कक्ष, सभागृह, रङ्गमञ्च, हेलिप्याड, पुरातन बस्ती, वृद्धाश्रम, विवाहमण्डप, योग केन्द्र, भ्वय् छें (ब्याङ्क्वेट), टेन्ट क्याम्प, साहसिक एवं मनोरञ्जनात्मक खेलकुद, स्वीमिङपुल लगायतको समेत सुविधा हुने बताइएको छ ।

परियोजनालाई कला नगरीका रुपमा विकास र प्रवर्द्धन गर्ने उद्देश्य लिइएको छ । महर्जनका अनुसार त्यहाँ निर्माण हुने हरेक पूर्वाधारमा कला देख्न पाइनेछ । वरिष्ठ कलाकार स्व. राजकुमार शाक्यको नेतृत्वमा ख्वापा: निर्माण सुरु भएको थियो । हाल शाक्यका दुई छोरा स्वरूप र सौरभ शाक्य नेतृत्वको कलाकार टोलीले उक्त जिम्मेवारी लिएको छ ।

प्रसिद्ध मूर्तिकार राजेश अवालेको परिकल्पनामा विसं २०७४ मा जग्गा एकीकरण/सङ्कलन गरी सुरु भएको परियोजनाको २०७७ सालमा विधिवत् रुपमा शिलान्यास गरिएको थियो । तर संस्थापक अध्यक्ष तथा प्रसिद्ध कलाकार राजकुमार शाक्यको निधनका कारण निर्माण प्रक्रिया केही समय सुस्ताएको थियो । हाल भैरव ख्वापा: निर्माण कार्य तीव्र गतिमा भइरहेको नेपाल आर्ट भिलेज प्रालिका अध्यक्ष राजेन्द्र शाक्यले जानकारी दिनुभयो ।

विभिन्न क्षेत्रका ऊर्जावान् कलाप्रेमी, व्यापारी, सामाजिक उद्यमी एवम् समाजका अग्रज एवम् प्रबुद्ध व्यक्तित्व समेतको संलग्नतामा परियोजना सुरु गरिएको शाक्यको भनाइ छ । कम्पनीका सञ्चालकमा अध्यक्ष राजेन्द्र शाक्यसहित राजेश अवाले, रुपक मान महर्जन, जीवन रत्न शाक्य, मदन मान महर्जन, उर्मिला शाक्य र सानुछोरी शाक्य हुनुहुन्छ ।

परियोजना नेपाली कला संस्कृतिको जगेर्ना, परम्परागत सीप, कौशलको उजागर, प्रचारप्रसार तथा पर्यटन प्रबर्द्धनका लागि आवश्यक योजना तथा कार्यक्रम तय गरी अनुसन्धान र विकास गर्ने उद्देश्यले सुरु गरिएको परियोजनाका संस्थापक सदस्य एवं प्रवक्ता रुपकमान महर्जनले बताउनुभयो ।

कलाग्राम ललितपुरको एकान्तकुनाबाट भैँसेपाटी-बुङ्गमति हुँदै १० दशमलव पाँच किलोमिटर, एकान्तकुनाबाट चुनिखेल हुँदै १३ किलोमिटर र सातदोबाटोबाट चापागाउँ हुँदै १५ किलोमिटरको दूरीमा छ । हाल त्यहाँ पुग्ने सडकमार्ग स्तरोन्नतिका लागि सम्बन्धित निकायमा पहल भइरहेको र काम अघि बढाइएको जनाइएको छ । ललितपुरबाट हेटौँडा जोड्ने कान्ति लोकपथको टिकाभैरवबाट तीन किलोमिटरको दूरीमा पुग्न सकिन्छ । हाल यस क्षेत्रमा सडक र खानेपानीका लागि केन्द्र र प्रदेश दुवै सरकारबाट समेत बजेट विनियोजन भइसकेको जनाइएको छ ।

परियोजनाअन्तर्गत नेपाली वास्तुकला शैलीमा आवास भवन निर्माण गरिनेछ । आवास क्षेत्रलाई व्यापारिक, पुरातन शैलीको घरबास र निजी निवास निर्माण गरिनेछन् । व्यापारिक क्षेत्रमा कम्पनीको नियमअनुसार व्यापार व्यवसाय सञ्चालन गर्न सकिनेछ । परम्परागत घरबास कार्यक्रमलाई पर्यटन प्रवर्द्धन हुने गरी सञ्चालन गरिनेछ ।

साथै परम्परागत कला, सीप र प्रविधिसहितको कलाग्राम स्थापना गरिनेछ । कलाग्राममा नेपाली सांस्कृतिक सम्पदाको जगेर्ना, हस्तकला उत्पादन र प्रदर्शन तथा आन्तरिक र बाह्य पर्यटनलाई बढावा दिने उद्देश्य लिइएको छ । कलाग्राममा हस्तकलाका परम्परागत हस्तकलाका आठ विधिहरू सुनचाँदीका गरगहना, थं ज्या: (तामा पित्तल र काँसका भाँडाकुँडा तथा मूर्तिहरू), थ्व ज्या:, मा ज्या: (तामा पित्तलका पत्रका भाँडाकुँडा तथा मूर्तिहरू), काष्ठकला, प्रस्तर कला, पौवा कला, चा ज्या: (माटाका भाँडाकुँडा) र न: ज्या: (विभिन्न हातहतियार तथा आवश्यक घर घरानामा उपयोग हुने फलामका सरसामान)लाई प्राथमिकता दिई तालिम केन्द्र सञ्चालन पनि गर्ने योजना छ । भविष्यमा नेपाल भरका अन्य हस्तकलाका विधा पनि समावेश गर्ने लक्ष्य छ । कम्पनीका अनुसार परियोजनालाई प्राकृतिक रुपमा समेत उपयोगी बनाउन ग्राममा वनस्पति उद्यान केन्द्र पनि बनाइनेछ । केन्द्रमा लोपोन्मुख र बहुउपयोगी वनस्पति संरक्षण र सम्बर्द्धनको उद्देश्य लिइएको छ ।

दिगो विकासका लागि प्राकृतिक सम्पदाको महत्वबारे जनचेतना फैलाई प्रकृतिमैत्री विकास, जैविक विविधता संरक्षण, नवीकरणीय ऊर्जा प्रयोगमा जोड, थोपा सिँचाइ प्रणाली, वृक्षारोपण, माटो परीक्षण, बागवानी व्यवस्थापन जस्ता विषयमा परामर्श सेवा प्रदान गरिनेछ । वातावरणसम्बन्धी अगुवाद्वारा कार्यशाला तथा सेमिनार सञ्चालन गरिनेछ । विद्यालय तथा विश्वविद्यालयका विद्यार्थीका लागि जीवन्त प्रयोगशाला (लाइभ ल्याबोरेटोरी) केन्द्रका रुपमा उद्यानको विकास गरिनेछ ।

आगन्तुकलाई 'जङ्गल पथ'बाट जङ्गल परिक्रमा गराउने व्यवस्था गरिनेछ । परिक्रमाका क्रममा वन्यजन्तु, पशुपन्छी तथा वनस्पतिको विविधता अवलोकन गर्ने अवसर मिल्ने छ । यस क्षेत्रमा पदयात्रा, साइक्लिङ, क्याम्पिङ र क्याम्पफायरका लागि स्थान पहिचान र विकास गरिने जनाइएको छ । रासस

# हार्ट अट्याकमा १० दिन अगावै देखिने यी ६ लक्षण

एजेन्सी । आजको समयको व्यस्त जीवनशैलीका कारण गम्भीर रोगको जोखिम पनि बढेको छ । हृदयघात पनि यस्तै रोग मध्ये एक हो । यो रोगले युवादेखि वृद्धसम्म सबैलाई सताएको छ । बिरामीले अस्पताल पुग्ने समय पनि नपाएर ज्यान गुमाउनुबाट यसको गम्भीरता अनुमान गर्न सकिन्छ । तर, धेरैजसो मानिसले यस प्रकारको मृत्युलाई अचानक भएको ठान्छन् । तर के तपाईलाई थाहा छ हृदयाघात हुनुभन्दा १० दिन अगाडि केही लक्षणहरु देखिन थाल्छन् । यदि समयमै यी लक्षणहरू पहिचान भएमा बिरामीको ज्यान बचाउन सकिन्छ । जानौं हृदयाघात हुनुअघि शरीरमा के-के लक्षण देखिन्छन् ?

हृदयाघात हुनु अघि विशेष लक्षणहरू

छाती वरिपरि असहज दबाब: मायोक्लिनिकको रिपोर्ट अनुसार, हृदयघात हुनुभन्दा केही समय अघि, तपाइँ छाती वरिपरि धेरै असहज महसुस गर्नुहुन्छ । थप रूपमा, त्यस्ता अवस्थाहरूमा बिरामीहरूले छातीको बीचमा छाती कम्प्रेशन, पूर्णता, वा दुखाइ अनुभव गर्न सक्छन् ।

काम नगरी थकान: हार्वर्ड हेल्थ पब्लिशिङको प्रतिवेदनअनुसार हृदयाघात हुनुभन्दा १० दिनदेखि एक महिनाअघि बिरामीहरूले थकान महसुस गर्न सक्छन् । नेशनल हार्ट, ब्लड एण्ड लङ इन्स्टिच्युटका अनुसार यो लक्षण पुरुषको तुलनामा महिलामा विशेष गरी देखिन्छ ।

पसिना आउनु : मुटुमा रगतको आपूर्ति नहुँदा बिरामीलाई धेरै पसिना आउन थाल्छ । धेरैले यसलाई सामान्य मान्न गल्ती गर्छन् । यस्ता लक्षण देखिएमा तुरुन्तै विशेषज्ञको सहयोग लिनुहोस् । यद्यपि, केही मानिसहरूले अपच वा वाकवाकी पनि अनुभव गर्न सक्छन् ।

मुटुको धड्कन बढ्नु : मुटुमा पर्याप्त रगत नपुग्दा शरीरमा धेरै समस्या आउन सक्छ । यसको मुटुको धड्कन पनि बढ्छ । हृदयाघात हुनुभन्दा केही दिन अगाडि बिरामीको मुटुको धड्कन बढ्न सक्छ ।

शरीरका विभिन्न ठाउँमा दुखाइ : हृदयाघात हुनु केही दिनअघि देखिने लक्षणमध्ये एउटा हो शरीरमा दुखाइ । यस्तो अवस्थामा बिरामीको छाती, ढाड, काँध, हात, घाँटी र बङ्गारा दुख्ने गर्छ । वास्तवमा जब मुटुमा कुनै समस्या हुन्छ, धमनीमा रोकावट हुन्छ । यसले दुखाइ निम्त्याउँछ ।

बारम्बार चक्कर आउँने : बिना कारण बारम्बार चक्कर आइरहेको छ भने यसलाई हल्का रूपमा लिन नबिर्सनुहोस । किनभने, यस्ता लक्षण हृदयाघातको लक्षण पनि हुन सक्छन् । वास्तवमा, चक्कर लाग्नु, टाउको दुख्नु वा छाती दुख्नु, सास फेर्न गाह्रो हुनु, रगतको मात्रा घट्नु र रक्तचाप घट्नु हृदयघातका लक्षणहरू हुन सक्छन् ।

# एचआइभी सङ्क्रमितको यौन तथा प्रजनन विषयमा अध्ययन हुने

काठमाडौँ । नेपालका एचआइभी सङ्क्रमित महिला र किशोरीहरूको यौन तथा प्रजनन स्वास्थ्यको विषयमा अध्ययन हुने भएको छ । एचआइभी सङ्क्रमित तथा लागु पदार्थ प्रयोगकर्ताहरूको सवालमा काम गर्दै आएको सुरुवात नामक संस्थाका माध्यमबाट नेपालका एचआइभी सङ्क्रमित महिला र किशोरीहरूको यौन तथा प्रजनन स्वास्थ्यको विषयमा अध्ययन हुन लागेको हो । सुरुवातले हाल क्यानडामा स्थित The Research Institute of Health, McGill University Health Centerको सहयोगमा "Measuring the Sexual and Reproductive Health and Rights and Responding to the Needs of Indigenous PLHIV WomenÚs and GirlÚs in Nepal" आदिवासी एचआइभी सङ्क्रमित महिला र किशोरीहरूको यौन तथा प्रजनन स्वास्थ्य अधिकार र आवश्यकताहरू अध्ययन नामक परियोजना अन्तर्गत उक्त अध्ययन हुन लागेको हो ।

एचआइभी सङ्क्रमितहरूको यौन तथा प्रजनन स्वास्थ्यको विषयमा कसैको पनि चासो नरहेको अवस्थामा आदिवासी एचआइभी सङ्क्रमित महिला र किशोरीहरूको यौन तथा प्रजनन स्वास्थ्य अधिकारको सवालमा अध्ययन हुनु आफैमा चुनौतीको विषय भएको सुरुवातका राजेश दिदियाले जानकारी दिए ।

एचआइभी सङ्क्रमितहरूको विषयमा यौन तथा प्रजनन स्वास्थ्य उपचारका लागि तथा परामर्शको लागि जो कोही स्वास्थ्य संस्था सम्म पुग्दासमेत किन चाहियो प्रजनन स्वास्थ्य सेवा भन्ने अवस्था रहेको बताउँदै उनले आदिवासी जनजातिहरू अझ महिला तथा किशोरीहरूको अवस्था भयावह रहेको दिदियाले जानकारी दिए ।

उक्त परियोजना मार्फत विश्वका ७ देशहरूमा एकै पटक आदिवासी जनजाति महिला तथा किशोरीहरूको विषयमा अध्ययन हुने उनले जानकारी दिए । नेपालमा भने यस परियोजनालाई सुरुवातले व्यवस्थापन गर्न लागेको जानकारी दिँदै नेपालका २२ जिल्लाका आदिवासी जनजाति महिला तथा किशोरीहरूको प्रजनन स्वास्थ्य र अधिकारका विषयमा अध्ययन गर्न लागेको दिदियाले जानकारी दिए ।

यो परियोजना विश्वका ७ देशहरू न्युजिल्यान्ड, ग्वाटेमाला, पेरु, क्यानडा, नाइजेरिया, भारत, र नेपाल समावेश छन् । नेपालमा, यो परियोजनाले एचआइभी सङ्क्रमित आदिवासी जनजाति किशोरी तथा महिलाहरूको यौन तथा प्रजनन स्वास्थ्यको ज्ञान, अवस्था, तथा भविष्यमा गर्नु पर्ने कार्यहरूको अध्ययन गर्ने लक्ष्य राखेको सुरुवातका अध्ययन व्यवस्थापक अनुप अधिकारीले जानकारी दिए । यो अध्ययन एआरटि सेन्टरहरू र स्थानीय संस्थाहरू मार्फत २२ वटा जिल्लामा व्यवस्थित रूपमा सञ्चालन गरिनेछ । यस कार्यक्रमलाई सफलतापूर्वक अघि बढाउन राष्ट्रिय सल्लाहकार समितिको बैठक हालै सम्पन्न भएको छ । बैठकले परियोजनाको कार्यान्वयनका लागि आवश्यक सहमति र निर्देशन प्रदान गरेको छ ।

थिमिTIMES

## हनुमन्ते.......

खुसि बिहार भनेर त्यो बेला बौद्ध शिक्षा अध्ययन गर्ने एक खालको विश्वविद्यालय जस्तो थियो । त्यहीं आएर बाल्मिकि ऋषिले पनि रामायण पूरा गरेको मानिन्छ । यस्तो पवित्र स्थानमा हाल आएर ढल मिसिन पुगेर अपवित्र हुन पुगेको छ । आधुनिक चिहान र नेवाः समुदाय बाहेक खस् ब्राम्हणहरुले समेत लाश जलाउने र गाँढ्ने समाधिस्थल रहेको उक्त स्थानको सुधारको लागि २०३२ सालतिर जर्मन प्रोजेक्टले ब्यासी र हनुमान घाट संगै सुधार पोखरीको बन्दोबस्त गरेको थियो । तर सुधार पोखरीमा ढलको पानी पटाएर सुधार गरी सुधारिएको पानी मात्रै नदीमा मिसाउने गरिएकोमा कयौं प्राविधिक कमजोरीका कारण पछि उक्त सुधार पोखरी निकम्बा हुन पुग्यो । अहिले त्यसको दोषी को भन्ने सवाल आउँछ ।

अहिले हनुमान घाटको वातावरण निकै प्रदुशित रहेको छ । नदी र नदी वरपर पहिले किसानहरु मल थुपार्ने गर्दथे । अहिले मल थुपारेको भने देखिन्न । तर नदीमा सीधै ढल मिसाएकाले नदी अत्यन्तै फोहर देखिन्छ । ढल निकास सीधै नदीमा नमिसाउने भनेर ठाउँ ठाउँमा उपचार पोखरीको व्यवस्था गरिएको भएपनि त्यसको उचित सम्बर्द्धन गर्न सकिएन । त्यसैले पनि हनुमन्ते नदीको सफाई र वातावरण बचाउने कुरा दीवास्वप्न सावित भएको छ । प्रत्येक वर्ष माघ महिनामा श्री माधवनारायणको ब्रत बस्न आउने ब्रतालु भक्तजनहरुको करबर पश्चात नगरपालिकाले केही दिनको लागि माथिबाट बहने फोहर नालीलाई छेऊतिरबाट तल बहने बन्दोबस्त मिलाउन डोजर प्रयोग गर्ने गर्दछन् । त्यसैगरी उता बीरा नदीको फोहर पानीलाई पनि सीधै कुलो खनेर तलतिर बगाउने गरेको पाइन्छ । तर त्यसले पनि उचित रुपमा सुधारको कार्य भने हुन सकिरहेको छैन । त्यसैले पनि हनुमान घाट पछि आउने चुपिंघाट यःसिंख्यःको मूल दीप, राम मन्दिर क्षेत्र र मंगलतीर्थ समेत पनि फोहर हुने गरेको पाइन्छ ।

प्रत्येक वर्ष बिक्रम संवतको नयाँ वर्षको बेला यःसिंख्यः चुपिंघाटमा मेला लाग्ने गर्दछ । तर पानी छुन सकिने अवस्थाको छैन । पहिला त्यहाँ नुहाएर शिवालय दर्शन गर्ने गरिन्थ्यो । त्यो भन्दा अगाडि धौभडेलहरुले निर्माण गरेको बृद्धाश्रम र सिद्धि स्मृति महिला तथा बाल अस्पताल पनि नदी छेऊमै निर्माण गरिएको छ । त्यसलाई पनि रातदिन फोहर गन्धले सताइरहेको अस्पतालका प्रमुख श्यामसुन्दर धौभडेल बताउँछन् । चुपिंघाट सुधारको लागि स्थानीयले जति आवाज उठाए पनि हालसम्म नगरपालिका र स्थानीय तहबाट कुनै पनि ठोस पाइला अगाडि बढाउन सकेको छैन । राममन्दिर परिसरको हालत पनि उस्तै छ । वर्षेनी बाढी रामजानकी मन्दिर परिसर भित्र पस्ने र भजनघर, शिवालय जलमग्न हुने गरेको छ । २०७२ सालको ठूलो बाढीमा बल्ल त्यहाँका बुढापाकाहरुलाई सेनाले उद्धार गरे ।

मंगलतीर्थ बाराही स्थानको हालत पनि दयनीय नै छ । भएका देवी देवताको मूर्ति र शिवालयहरुको संरक्षण हुन सकिरहेको छैन । श्राद्ध गर्नको लागि स्थान छुट्याएको भएपनि बस्ने र पूजा गर्ने अवस्था नै हुँदैन । माथि सम्म घाट पुरिसकेको अवस्था रहेका कारण पनि उक्त स्थानमा पहिलेदेखि रहेका देवी देवताहरु कतिपय पुरिसकेका र कतिपय हराइसकेको पाइन्छ । यो सांस्कृतिक तथा पुरातात्विक सम्पदा माथिको अतिक्रमण मात्रै होइन कि वातावरणीय हिसावले पनि बेवास्ता गरेको परिणाम भन्नु पर्दछ । सुन्दर बगैंचा, राम्रो लामो पाटी तथा पितृकार्य गर्ने गरी परिसरको व्यवस्था गरिएको भएपनि नदीको पानी स्वच्छ नहुँदा श्राद्ध गरिसकेपछि फेरि एक पल्ट घरमा गएर चोख्याउनु पर्ने अवस्था मंगलतीर्थमा छ । नदी निकै माथि सम्म आई कहिले काहीं बाढी आउँदा लामो पाटीको धुरी मात्रै देखिने गरेको पनि स्थानीय मानिसहरुले बताएका छन् ।

सल्लाघारी पुग्दा सम्म कालो नाली मात्रै बग्ने गरेको देखिन्छ । त्यही भएर केही वर्ष अगाडि चुनदेवी स्थानमा बाढी आएर पेटीको रुपमा प्रयोग गर्दै आइरहेको गाडी जान मिल्ने कोरिडोर हुँदै लोडगाडी अगाडि लान जान मिल्छ मिल्दैन भनेर हिडेर सडक पहिल्याउने क्रममा खुल्ला राखिएको ठूलो नालीमा पस्न पुगेका ट्रक चालक नाली भित्र पसी बेपत्ता भएको थियो । चार दिन पछि पाटनको धोवी खोलामा प्रहरीले उनको लाश भेट्टाएको थियो । सल्लाघारी क्षेत्रमा कल कारखानाबाट नदीमा सीधै फोहर पानी जोडेको भेटिन्छ । सल्लाघारी मुन्तिर राधेराधे क्षेत्रमा पनि ठूल्ठूला कल कारखानाको पानी नाली बनाएर उही हनुमन्ते नदीमा मिसाइएका छन् । सूर्यविनायक नगरपालिका लगायत शहरका विभिन्न स्थानहरुको फोहर व्यवस्थापन गरी आएको नेम्प्सीम्याक्सले पनि आफ्नो कारखानाको फोहर समेत उहीं नालीमा मिसाएर नदी फोहर गरिरहेको पाइन्छ ।

चखू फाँट पुगेपछि तरकारी बारीको राम्रो स्थानको रुपमा किसानहरु सोही पानी प्रयोग गरी तरकारी उमारीरहेका पाइन्छन् । अत्यन्तै बाक्लो बग्ने लेडो पानीलाई पम्पले तानेर तरकारी बारीतिर प्रयोग गरिरहेको पाइन्छ । सोही स्थानमा श्राद्ध गर्ने र घरपालुवा जन्तुहरुलाई चराउने स्थानले पनि संकुचन महसुस गर्न थालेको छ । चखू दोभान पहिला धार्मिक स्थान थियो । अहिले केही सुधारको कार्य हुन गइरहेको छ । सो स्थानको अलि तल पुगेपछि हनुमन्ते खोलासंगै दुई वटा थिमिका प्रजापतिहरुले मात्रै प्रयोग गर्ने दीपहरुको बन्दोबस्त गरेको छ । सो स्थानको अलि तल पुगेपछि दक्षिण बाराही आसपासमा शाक्य बज्राचार्य लगायत श्रेष्ठ समुदायले प्रयोग गर्ने गरेको दीपहरु पनि बनाइएका छन् । ठाउँ ठाउँमा रहेका दीपहरुले पनि मानवीय जीवनलाई सहज गर्न सहयोग गरेको पाइन्छ ।

नदी दोहन, नदीको बहाब वरपर सर्ने गरेको तथा भूमापियाहरुको ध्यान जग्गा जमीनमा पर्ने गरेका कारण सो क्षेत्र संगै २०२१ सालको नापी नस्सा र हाल नदीको बहाब क्षेत्र फरक पर्न गएका कारणले करिब करिब ४० रोपनी जति जग्गामा मध्यपुर थिमि नगरपालिका र सूर्यविनायक नगर बीच साँध सीमाकै विवाद चर्किरहेको पाइन्छ । अलि तर पुगेपछि हनुमन्ते नदी सागबारी पुग्दछ । कुनै बखत निकै साग उत्पादन हुने सो क्षेत्रमा हाल घदेरीहरु निर्माण हुन थालेसंगै सागबारीको नाम मेट्ने सम्भावना हुँदैछ । सो स्थानमा सोह्र श्राद्ध गर्नेहरु आउने भएपनि उचित रुपमा बस्ने पाटी समेत व्यवस्था छैन । बगरमै श्राद्ध गरेर फर्कनु पर्ने बाध्यता देखिन्छ ।

ठाउँ ठाउँमा रहेका पर्ति जग्गाहरु समेत भूमाफियाहरुले प्लटिङ्ग गरी हडपेका कारण अहिले नदी संकुचन हुन पुगेको छ । नदी किनारका ठाउँ ठाउँमा अहिले पनि पीच सडक पुर्याएर जग्गा प्लटिङ्गका कामहरु भइरहेका छन् । सागबारी क्षेत्रमा कुतु प्रजापतिहरुका तीन वटा दीपको व्यवस्था छ । तर सो क्षेत्रको नदीको पानी योग्य नभएकाले दीपको लागि र श्राद्धको लागि पनि नजिकको इनारबाट पानी लगेर प्रयोग गर्ने गरिरहेका छन् । हाल त्यहाँ १७ रोपनी जग्गा प्लटिङ्ग भइरहेको छ । त्यसले पनि उर्वर जग्गा सागबारी साग नभई घर फल्ने निश्चित भइसकेको छ । आलु, तरकारी र धान खेती गर्न मिल्ने जग्गा नै अहिले प्लटिङ्ग भइरहेको छ । पहिला पहिला उक्त स्थान हिउँदमा नदी सुक्ने स्थान थियो । तर बस्तीको नाली सीधै हनुमन्ते खोलामा मिसाएकाले हाल बाह्रै महिना गन्हाउने पानी बगिरहेको देखिन्छ ।

हनुमन्ते खोला मनहरा नदीमा मिसिनु भन्दा अगाडि गोदावरी नदी आएर हनुमन्तेमा मिसिएको छ । त्यहाँ एउटा घाट निर्माण गरी पुजारी समेत बन्दोबस्त गरिएको पाइन्छ । उक्त स्थानमा पनि पानी नराम्ररी गन्हाउने भएको छ । गोदावरी क्षेत्र भएर लामाटार हुँदै आउने उक्त नदी फराकिलो नै छ । २०४०।४५ सालसम्म माछा मार्ने उक्त नदीमा हाल छुन र हेर्न समेत नसक्ने अवस्था भएको सागबारीका धनकृष्ण कुतु बताउँछन् । चुखूँ पछिको दोभान गोदावरी दोभान हो । त्यसलाई व्यवस्थित गर्न गौरीकुण्ड बनाएर गोदावरी नदीलाई व्यवस्थित गर्ने योजना बनाएपनि नालीलाई नियन्त्रण गर्न नसकेकाले फोहर पानी बग्ने क्रम भने निरन्तर जारी छ । अन्त्यमा नदी मनहरा नदीमा मिसिन्छ । त्यहाँ त मनहराको भन्दा ठूलो पानी हनुमन्तेको हुन पुगेको छ । घर घरबाट र बस्ती बस्तीबाट फोहर पानी खोलामा मिसाइएकाले अन्तिम बिन्दुमा रहेको हुनमानको मूर्ति रहेको परिसर पुग्ने गरेको हनुमन्ते नदीको कथा व्यथा त्यहाँ गएर अन्त्य हुन्छ ।

बागमती सुधार महाअभियान चलिरहेको यो समयमा हनुमन्ते खोला सुधारको लागि ब्रम्हायणीदेखि सल्लाघारी सम्मको करिब १२ किलोमिटर वरपर रहेका बस्तीबाट खोलामा सीधै बग्न दिएका फोहरको नालीलाई नियन्त्रण गर्नुपर्ने देखिन्छ । त्यसैगरी हरियाली वातावरण कायम राख्नको लागि नदी वरपर बृक्षारोपण गर्नुपर्ने देखिन्छ । ठाउँ ठाउँमा ड्यामको बन्दोबस्त गरी भूक्षयिकरण रोक्ने र हरियाली बगैंचा निर्माणको कार्यतिर स्थानीय निकाय वा सरोकारवालाहरु लाग्न सकेको खण्डमा आज नभए पनि भोलि यो खोलाले पुनर्जीवन पाउने देखिन्छ । बागमती नदी सफाई महा अभियान भनेर बागमती मात्रै सफा गर्ने होइन कि सहायक नदीहरु पनि सफा गर्नु पर्दछ । अहिले पनि हाम्रो आँखा खुलेन भने निकै मेहनत गरेर निर्माण गरेका कला, संस्कृति र सभ्यता नै लोप हुने देखिन्छ ।

## नेपाल साफ यू-२० च्याम्पियनसिपको सेमिफाइनलमा

काठमाडौं । काठमाडौंमा जारी साफ यू-२० च्याम्पियनसिप अन्तर्गत समूह ए बाट नेपाल र बंगलादेश सेमिफाइनलमा पुगेका छन् । समूह ए अन्तर्गत मंगलबार सम्पन्न खेलमा बंगलादेशले श्रीलंकालाई २-० ले पराजित गरेसँगै नेपाल र बंगलादेश सेमिफाइनलमा पुगेका हुन् । समूह ए का दुवै खेलमा हार बेहोरेपछि श्रीलंका भने प्रतियोगिताबाट बाहिरिएको छ ।

गत आइतबारबाट शुरु भएको प्रतियोगिताको पहिलो खेलमा समूह ए मा रहेको नेपालले श्रीलंकालाई १-० गोल अन्तरले पराजित गर्दै विजयी शुरुवात गरेको थियो भने सोमबार भएको समूह बी को खेलमा भारतले भुटानलाई १-० गोलले पराजित गरेको थियो ।

समुह ए को पहिलो खेलमा नेपालसँग पराजित भएको श्रीलंका सेमिफाइनलमा पुग्न यो खेल जित्नै पर्ने अवस्थामा रहेको छ भने बंगलादेशले आफ्नो पहिलो खेल खेल्दै छ । नेपालसहित ६ देशले भाग लिएको यस प्रतियोगितामा नेपाल समुह ए बंगलादेश र श्रीलंकासँग रहेको छ भने समूह बी मा भारत, भुटान र माल्दिभ्स रहेका छन् । त्यस्तै नेपालले भने समूह चरणको अर्को खेल विहिबार बंगलादेशसँग खेल्ने तालिका रहेको छ ।

## साउदी सुपर कपको उपाधि अल हिलालले जित्यो

काठमाडौं । अल हिलालले साउदी सुपर कपको उपाधि जितेको छ । गत शनिवार राति सम्पन्न फाइनल खेलमा अल हिलालले अल नासरलाई ४-१ गोल अन्तरले पराजित गर्दै साउदी सुपर कपको उपाधि जितेको हो । पहिलो हाफमा १-० ले पछि रहेको अल हिलालले दोस्रो हाफमा शानदार कम ब्याक गर्दै ४ गोल गरेको थियो ।

अल हिलालको जितमा अलेक्सान्दर मिट्रोभिकले २ गोल गरेका थिए भने सेर्गेज मिलिन्कोभिक साभिक र माल्कमले एक एक गोल गरेका थिए । त्यस्तै अल नासरका लागि एक मात्र गोल क्रिस्टियानो रोनाल्डोले गरेका थिए । योसँगै अल हिलालले अहिलेसम्म पाँच पटक साउदी सुपर लिगको उपाधि जितेको छ । त्यस्तै अल नासरले भने यो उपाधि २ पटक जितेको छ ।

## एकै ओभरमा ३९ रन !

एजेन्सी । टि २० अन्तर्राष्ट्रिय क्रिकेटको एकै ओभरमा ३९ रन बनाएर सामोआका ब्याट्सम्यान डारियस भिसेरले नयाँ कीर्तिमान कायम गरेका छन् । भिसेरले भानुनुआतुविरुद्धको टि ट्वान्टी विश्वकप पूर्वी एसिया-प्रशान्त क्षेत्र छनोटमा एकै ओभरमा ३९ रन बनाएका हुन् । आफ्नो तेस्रो टि ट्वान्टी आईमा २८ वर्षीय भिसेरले नलिन निपिकोको ओभरमा ६ छक्का र ३ नोबल सहित ३९ रन बनाएका हुन् ।

पुरुष टि ट्वान्टी आईमा एक ब्याट्सम्यानले एक ओभरमा ६ छक्का प्रहार गरेको यो चौथो पटक हो । पहिलो पटक कुनै टिमले एक ओभरमा ३६ भन्दा बढी रन बनाएको हो । समोआको पारीको १५ औं ओभरमा यो रेकर्ड बनेको थियो । भिसेरले निपिकोको पहिलो तीन बलमा डीप मिडविकेटमा छक्का प्रहार गरेका थिए । ओभरको चौथो बल नो बल थियो । फ्रि-हिटमा भिसेरले लेग साइडमा छक्काको लागि प्रहार गरेका थिए । त्यसपछि एक डट बल भएको थियो ।

निपिकोले पाँचौ बलमा दोस्रो पटक नो-बल गरे । फ्रिहिटमा पुनः छक्का प्रहार भयो । त्यसपछि पुनः नो बलमा छक्का प्रहार गरेपछि अर्को फ्री हिटमा पनि भिसेरले डीप स्क्वायर लेगमा फ्लिक गर्दै छक्का प्रहार गरे । सबै गरेर एक ओभरमा ३९ रन बन्यो ।

यसअघि पुरुष टी ट्वान्टी आईमा एक ओभरमा ३६ रन बनाएको पाँच पटक भएका थिए । सन् २००७ को टि ट्वान्टी विश्वकपमा इंग्ल्यान्डका स्टुअर्ट ब्रोडको बलमा भारतका युवराज सिंहले ६ छक्का प्रहार गरेका थिए । वेस्ट इन्डिजका किरोन पोलार्डले सन् २०२१ मा श्रीलंकाकी अकिला धनञ्जयविरुद्ध र नेपालका दीपेन्द्रसिंह ऐरीले यो उपलब्धि दोहोर्याएका थिए ।

सन् २०२४ मा वेस्ट इन्डिजका निकोलस पुरन तथा भारतका रोहित शर्मा र रिंकु सिंहले अफगानिस्तानविरुद्ध एकै ओभरमा समान ३६ रन बनाएका थिए । उनीहरुले एकै ओभरमा ६ छक्का भने प्रहार गरेका थिएनन् ।

## महिला टि ट्वान्टी विश्वकप युएई हुने

एजेन्सी - महिला टि ट्वान्टी विश्वकप २०२४ युएईमा आयोजना हुने भएको छ । असुरक्षा लगायतको कारण देखाउदै बंगलादेशबाट विश्वकप युएई सारिएको हो । युएईमा विश्वकप आयोजना भए पनि होस्टिंग अधिकार भने बंगलादेशकै रहनेछ । बंगलादेशमा जुलाई र अगस्टमा देशव्यापी सरकार विरोधी आन्दोलनपछि आइसिसीले कार्यक्रम स्थल परिवर्तन गरेको हो ।

तत्कालिन प्रधानमन्त्री शेख हसिना राजिनामा दिएर भारत पलायन हुन पुगेकी थिइन् । त्यहाँ अन्तरिम सरकार गठन भएको छ । तर, बंगलादेशमा तोडफोड र लुटपाटका साथै हिंसात्मक गतिविधिका घटनाहरू निरन्तर भइरहेकाले आइसिसी यो निणर्यमा पुगेको हो ।

बंगलादेश सरकारले विश्वकप आयोजना अधिकार गर्न अन्तिम समयसम्म प्रयास गरेको थियो । तर, अस्ट्रेलिया, भारत, न्युजिल्यान्ड र बेलायतलगायत देशले आफ्ना नागरिकलाई बंगलादेश जान रोक लगाएको छ । बिसिसिआईले विश्वकप आयोजनाका लागि आइसिसीको प्रस्ताव अस्वीकार गरेपछि युएई, श्रीलंका र जिम्बाब्वे विश्वकप आयोजनाका लागि विकल्पका रुपमा रहेका थिए ।

## पोखरामा निकालियो तायमचाः नृत्य

काठमाडौं । नेवा समुदायको बस्ती रहेको पोखरामा सापारु पर्वको अवसर पारेर तायमचाः नृत्य निकालिएको छ । नेवा खलः कास्कीको आह्वानमा पोखराका विभिन्न ३३ स्थानबाट नृत्य निकालिएको हो । नेवा खलका शाखा (कचाः) खलःहरूले तायमचा निकालेको खलः कास्कीका अध्यक्ष अशोक पालिखेले जानकारी दिए । पोखराका हेमजा, लामौचार, बगर, मोहरियाटोल, भैरवटोल, भीमसेनटोल, गणेशटोल, रामकृष्णटोल, बगालेटोल, सिमलचौर, राष्ट्र बैंक चोक, पार्दी विरौटा, छोरेपाटन, पृथ्वीचोक, नयाँबजारबाट तायमचाः निकालिएको थियो ।

यसैगरी महेन्द्रपुल, तेर्सापट्टी, रानीपौवा, गौंडाकोमुख, कुँडहर, रामबजार, सिसुवा, अर्घौं, गगनगौंडा, जनताको चौतारा, बागमारा, हंसपुर र देउरालीलगायतका स्थानबाट नृत्य निकालिएको पालिखेले बताए । "साँज्या धेरै निस्किए पनि तायमचाः एउटा टोलबाट निकालिन्छ । यो नेवारी समुदायको परम्परागत नृत्य हो", पालिखेले भने,"पोखरामा बिहानदेखि नै पानी परेकाले दिनभरको झरीमा सापारु पर्वको अवसर पारेर निकालिएको थियो ।"

त्यही अवसरमा यही भदौ ८ गते नेवा तायमचाः नृत्य प्रतियोगितासमेत आयोजना गर्न लागिएको छ । नेवा कचाः खलः नयाँबजारको आयोजना तथा नेवा मिसा पुचः नयाँबजार, नेवा ल्यायम्ह पुचः नयाँबजार र नेवाः कल्याणकारी गुथीको सहआयोजनामा प्रतियोगिता हुन लागेको हो ।

हरेक वर्ष हुँदै आएको प्रतियोगितामा यस वर्षको शृङ्खलामा २९ टिमले प्रतिस्पर्धा गर्ने प्रतियोगिता सम्पादन समितिका मूल संयोजक शम्भुलाल श्रेष्ठले जानकारी दिए । प्रतियोगिताको विजेतालाई नगद रु तीन लाख एक, द्वितीयलाई रु दुई लाख एक, तृतीयलाई रु एक लाख एक र सान्त्वनालाई रु १० हजार एक प्रदान गरिने श्रेष्ठले बताए । पोखरामा साढे दुई सय वर्ष पुरानो मानिने यो नाच विसं २०५६ देखि हरेक वर्ष प्रतियोगिताको रूपमा आयोजना हुँदै आएको छ ।

परीको पहिरनमा सजिएका चार जना र एक जना जोकर घुमीघुमी तायमचाः नाचिन्छ । पहिले पुरुषले मात्र नाच्ने गरेकोमा एक दशकयताबाट महिलाहरूले पनि नाच देखाउँछन् । कास्कीका राजा सिद्धिनरसिंह शाहको पालामा भक्तपुरका नेवार समुदायले तायमचाः भित्र्याएको किंवदन्ती छ ।

## मृतकको.......

सापारुका दिन विशेषगरी दिवंगत परिवारका सदस्य वा आफन्तको स्मृतिमा साँस्कृतिक झाँकी, हाँस्य व्यंग्यसहित जात्रा निकाल्ने प्रचलन छ । काठमाण्डौंमा मृतकको तस्विरसहित गाईको झाँकी हनुमानढोका दरबार परिक्रमा गराइन्छ । दिवङ्गत भएकाको स्मृतिमा पुण्यको कामना गर्दै गाईको झाँकीमा आएकालाई चोखो खानेकुरा र भेटी दान गर्दा पितृले मोक्ष पाउँछन् भन्ने मान्यता छ ।

धार्मिक र साँस्कृतिक महत्वको सापारु भक्तपुरमा मुलुकका अन्य भागमा मनाउने भन्दा भिन्न र मौलिक शैलीमा मनाईन्छ । भक्तपुरमा सापारुलाई आँसु र हाँसोको संगमको पर्वको रुपमा लिईन्छ । शोकलाई हाँसोमा परिवर्तन गर्ने प्रतिकात्मक अर्थ र सन्देश बोकेको पर्वको रुपमा समेत सापारुलाई लिईन्छ ।

जनैपुर्णिमाको साँझ शुरु भएपनि सर्वसाधरणले मुख्यरुपमा भाद्र शुक्ल प्रतिपदाको दिन सापारु पर्व मनाउँछन् । भक्तपुरमा सर्वसाधारणले मृतकको सम्झनामा साज्या निकाल्नु अघि प्रतिपदाको दिन बिहान सबेरै दरवार स्क्वायर स्थित तलेजु भवानीको साज्या निकाल्ने परम्परा रहेको छ ।

भक्तपुरको सापारुको मुख्य आकर्षण घिन्ताङघिसी नाच हो भने अर्को आकर्षण मृतकको सम्झनामा नगर परिक्रमा गरिने ताहासा (तहामचा) । घिन्ताङघिसी नाचसँगै ताहासालाई परिक्रमा गराए मृतकलाई स्वर्गमा जाने बाटोमा भएका अप्ठ्यारो हट्ने जनविश्वास रहेको छ ।

घिन्ताङघिसी धिमे, भुस्या, खीं, ताय् बाजाको संयुक्त ताल र लयमा करिव एक हात लामो गोलाकार काठको लट्ठी एक आपसमा जुधाएर नाचिने नाच हो । यो नाच समूहमा नाचिने नाच भएकोले जति बढी सहभागीको संख्या हुन्छ त्यति नै मनमोहक देखिन्छ । घिन्ताङघिसीमा बच्चादेखि बृद्धहरु सहभागी हुन्छन ।

ताहासा चारवटा बाँसबाट बनाईन्छ । हरियो करिव १५ फिट लामो चारवटा बाँसलाई ठाडो पारेर आयातकारमा बाँधेर त्यसलाई कपडाले बेरेर ताहासा बनाईन्छ । ताहासाको शिरमा गाईको चित्र राखी महिला र पुरुषको संकेत जनाउन कपडाले वेताली बाँधिन्छ । त्यसमा परालको सिङ र सिङ माथि पलेस्वाँ लप्ते (कमलको फुलको पात), चोबो (कपाल जस्तो देखिने) मयुरको पङ्खा र रङगीचङगी फुलले सजाईन्छ । टाउको दुई छेउमा सिङसँगै पतचा (रङ्गिन माथि गोलाकार तर झण्डा जस्तो देखिने) सजाइन्छ । द्योःगाचा अष्टमातृकाको प्रतिक खास्तो राखी छाता ओढाईन्छ । ताहासाको बिचमा जामाचा लगाई लामो दुईवटा पटुका बाँधिन्छ । अगाडि पछाडी मृतकको तस्बिर, भगवानको तस्बिर सहित ऐना राखिन्छ ।

भक्तपुरमा कुमालेहरुले भने मृतकको आत्माको शान्तिका लागि माटोको गाई बनाएर नगर परिक्रमा गराईन्छ । कुमालेहरुको पुख्यौली पेशा माटोका भाँडा बनाउनु हो । त्यसैले उनीहरुले आफ्नै मौलिक पुख्यौली पेशा अन्तर्गतको माटोको आकर्षक गाई बनाएर नगर परिक्रमा गराईने गरेको संस्कृतिकर्मी प्रा डा. पुरुषोत्तमलोचन श्रेष्ठ बताउँछन ।

गाईसँगै मृतकको स्मृति झल्काउने करुण रस प्रधान गीति लीला, रामायण र श्री कृष्णा लीलासमेत प्रदर्शन गरिन्छ । साथै केटाकेटीहरुलाई आकर्षक तवरले महादेव-पार्वती, कृष्ण-राधिकाको रुपमा श्रृंगारी वाजागाजाका साथ वासा लुइके गरेर प्रर्दशन गर्ने प्रचलन समेत रहेको छ ।

नेवार समुदायमा सगुन दिदाँ रुनु भनेको मृतकप्रतिको सम्मानको रुपमा लिइन्छ । सगुन पुजा सकेपछि काँचो सानो केराउ, नासपाती, काँक्रो लगायत फलफुल र दही चिउरा टोल छरछिमेकमा बाहिर बसेकालाई बाँडिन्छ र बाँसको नोल लगाएर ताहासालाई मृतकका आफन्तले काँधमा बोकेर अगाडि पछाडी पटुका समातेर नगर परिक्रमा गराईन्छ । नगरपरिक्रमा गराउँदा ताहासामा मृतकको तस्विरले जात्रा हेर्न आएकाहरुलाई कसको ताहासा निकालेको त्यो स्पष्ट हुने गर्दछ ।

भक्तपुरमा मृतक महिला, पुरुष र बालबालिका को हो, त्यसको स्पष्ट संकेत दिने गरी सापारु निकालिन्छ । मृतक बच्चा हो भने डोको, महिला हो भने रातो निलो कपडामा सारी र हाकुपटासी सहितको ताहासालाई नगर परिक्रमा गराईन्छ । पुरुष हो भने सेतो कपडाले बेरेको हुन्छ । त्यसैगरी गर्भवती महिलाको हो भने गाईसँगै अलि तल सानो गाई बनाएर लाने परम्परा छ । त्यसैगरी एका परिवारको दुई सदस्यको मृत्यु भयो भने एउटै ताहासामा तल अर्को सिङ्ग राखेर मृतकको तस्बिर सहित काखमा राखेर ल्याउने परम्परा छ ।

सापारुको दिन विधिवत रुपमा गाईलाई नगर परिक्रममा गराएमा मृतात्माहरु सजिलैसित स्वर्गलोकमा पुग्छन् भन्ने धार्मिक विश्वास रहेको छ । सापारुको दिन स्वर्गमा ढोका खुल्ने र मृतकका आत्माले गाईको पुच्छर समातेर वैतणी नदी पार गरी स्वर्गलोकमा पुग्छ भन्ने जनविश्वासले साज्या निकाल्ने गरेको हो ।

भक्तपुरमा स्थानीय लाकोलाछे टोलबाट भैरवनाथको र खँलाबाट नकिन्जु अजिमाको ताहासा निकालेपछि सापारु सम्पन्न गर्ने परम्परा रहेको छ । भैरवको ताहासा ल्याउँदा लाकोलाछे टोलमा वर्षदिन दिवंगत भएका सबैको ताहासा पनि भैरवको ताहासाँसँग लानुपर्ने चलन रहेको छ । भैरवनाथको ताहासालाई नगरपरिक्रमा गराउँदा टौमढी, दरवार स्क्वायर र तचपालमा तीन तीन पटक परिक्रमा गराइन्छ । अन्तमा भैरवनाथको ताहासा चुपिङघाट स्थित पुलमा लगेर ताहासा बिगारी पराल हनुमन्ते नदीमा सेलाउने परम्परा छ ।

भक्तपुरमा सापारु कृष्णाष्टमीसम्म मनाईन्छ । प्रतिपदाको दिन मुख्यरुपमा र अन्य दिन साँझ विभिन्न झाँकीसहितको घिन्ताङघिसी नाच निकालेर सर्वसाधारणलाई मनोरञ्जन दिने गरिन्छ । गाईजात्राकै अवसरमा भक्तपुरमा भाद्रकृष्ण अष्टमीसम्म शहरका देवीदेवताहरु दत्तात्रय, भैरव, भिमसेन, बाराही, कृष्णको खट जात्रा गरिन्छ । भक्तपुरमा डबली डबलीहरु माक प्याखं, नागाचा प्याखं, लाखे प्याखं, देवी प्याखं, भैल प्याखं, भालुचा प्याखं, रामायण, लुसीचा प्याखं, खिचा प्याखं लगायतका नाच प्रदर्शन गर्ने प्रचलन रहेको छ ।

शोक र उल्लासको संगमको रुपमा मनाइने सापारु पर्वलाई काठमाण्डौका राजा प्रताप मल्ल, भक्तपुरका राजा जगतप्रकाश मल्ल र ललितपुरका राजा सिद्धिनरसिँह मल्लको पालादेखि बाजागाजाको संस्कार थालिएको प्रा.डा श्रेष्ठ बताउँछन । उनका अनुसार लिच्वीकालमा रमाइलोको लागि गोरु जुधाउने परम्परा थियो । अनन्तलिङ्गेश्वरको अभिलेखमा गो युद्ध उल्लेख छ । गोरु जुधाएर रमाइलो गर्ने र मृत्यु संस्कारमा गाई यात्रा गर्ने चलन पुर्वमध्यकालमा शुरु भएको श्रेष्ठको भनाई छ ।

सापारु विशेषगरी नेवार समुदायले मनाउने पर्व हो । राजा प्रताप मल्लले सापारु पर्व चलाएको किम्वदन्ती भएपनि नेवार समुदाय बाहेकले गाईजात्रा गर्ने प्रचलन रहेको पाईंदैन । मल्लकालमा नेपाल मण्दल विशेषगरी काठमाण्डौं उपत्यकामा नेवार समुदायको मात्र बसोबास भएको स्थान भएकाले सापारु नेवार समुदायले मात्र मनाउने पर्वको रुपमा विकास भएको प्रा. डा. श्रेष्ठ बताउँछन । नेवार समुदायमा पनि भक्तपुरको सापारु भिन्न र विशेषखालको हुनुमा तत्कालिन नेपाल मण्दलको राजधानी भक्तपुर हुनु प्रमुख कारण भएको प्रा. डा. श्रेष्ठ बताउँछन ।

प्रा. डा. श्रेष्ठ भने राजा जयस्थिती मल्ल भन्दा पहिल्यै भक्तपुरमा सापारु मनाउँदै आएको दावी गर्छन । राजा जयस्थिती मल्लले सम्पादन गरेको गोपालवंशालीमा साँःयात भन्ने उल्लेख भएको प्रमाण प्रस्तुत गर्दै लिच्छवीकालको अभिलेखमा गौ युद्ध उत्सव भनी लेखिएको पाईएकाले लिच्छवीकालमा पनि सापारु मनाईन्छ भन्ने मान्न सकिने उनको भनाई रहेको छ । उनले विक्रमको १४ औ शताव्दी भन्दा अगाडि लिच्छविकालको अन्त्यतिर सापारु पर्व शुरु भएको मान्न सकिने आधारहरु भएको बताउँछन् ।

त्यसैगरी अर्का संस्कृतिकर्मी हरिशरण राजोपाध्यायका अनुसार "भक्तपुर तन्त्र विद्यायुक्त शहर हो । यहाँका हरेक साँस्कृतिक परम्पराहरु तान्तिक विधि पूर्वक मनाइन्छ," उनले भने, "भक्तपुरमा प्रत्येक पाइला पाइलामा तान्त्रिक शक्ति छ, त्यही शक्तिको आधारमा यहाँ सापारु मनाइन्छ ।"

भक्तपुर नगर तन्त्रको आधारमा स्थापित भएको र त्यही आधारलाई मानेर यहाँ मृतकको नाममा ताहासा, दोसाँ, महादेव पार्वती, वासा लाकेगुलगायत गरी नगर परिक्रमा गराईने परम्परा रहेको राजोपाध्यायले बताए । गाईजात्रा सबै ठाउँमा मृतकको शान्तिका लागि मनाएपनि अन्य स्थानमा तान्त्रिक शक्ति नभएको राजोपाध्यायले बताए । "पाटनमा दशमहाविद्या तन्त्र भएर पनि त्यो अनुसारको जात्रा मनाउँदैन । सामाजिक विकासको क्रममा काठमाण्डौ पाटनमा त्यो विस्थापित हुँदै गएकाले यहाँको जस्तो नमनाएको हो," उनले भने ।

गरुडपुराणमा मानिसको मृत्यु भएपछि ११ दिनमा वृषसर्ग गर्नुपर्ने परम्परा छ । त्यसदिन मृतक परिवारले जिउँदो गाई र त्यसका लागि आवश्यक जग्गा दान दिए मात्र मृतकको आत्मा शान्ति हुन्छ भनेको छ । जग्गा र गाई दान गर्ने विकल्प खोज्दै जादा वृषसर्ग कर्म नगरेपनि स्वर्गको ढोका खोल्ने भाद्र शुक्ल प्रतिपदाको दिन साज्या गर्दा मृतकले गाईको पुच्छर समातेर वैतरणी नदी तर्छन भने धार्मिक विश्वास भएर नेवार समुदायले यो पर्व मनाउन थालेको अर्को संस्कृतिविद ओम धौभडेलले बताउँछन् ।

राजा प्रतापमल्लले सापारु पर्वले मृत्यु सत्य हो भन्ने दर्शाउँदा समेत रानीको मन शान्त नभएपछि हास्यँ रसको प्रयोग भएको कथा पनि रहेको छ । "प्रारम्भमा गाई यात्राको रुपमा रहेको यो पर्व मध्यकालमा गाईजात्रा भएको हो । पहिला गाईलाई नगर परिक्रमा गराए मृत्युसंस्कार पुरा हुन्थ्यो पछि गाईसँगै विभिन्न बाजागाजा पनि राखियो त्यसपछि यात्राबाट जात्रामा परिणत भएको हो," धौभडेल कथन छ ।

## वागमती....

अभिलेखिकरण र दस्तावेजीकरण गरिनु पर्ने व्यवस्था गरिएको छ । प्रदेश सरकारले राजपत्र प्रकाशित गर्दा नेपालीका अतिरिक्त तामाङ र नेपाल भाषामा समेत प्रकाशन गर्नू पर्ने ऐनमा उल्लेख छ ।

प्रदेश सभाबाट पारित विधेयकका अनुसार अव सरकारले तामाङ र नेपाल भाषाको व्यवहारिक र प्रभावकारी बनाउन भाषा संरक्षण र प्रबर्द्धनका कार्यक्रम सन्चालन हुने छन् । यसका साथै भाषा प्रयोग गर्नका लागि मानकीकरण, स्तरीकरण, आधुनिकीकरण र व्यबस्थित बनाउन कम्प्युटर प्रोग्राम, उपकरण तथा भाषा अनुवादजस्ता प्रविधि र यन्त्रको समेत व्यबस्था गर्नु पर्ने हुन्छ ।

प्रदेश सकारले भाषाको प्रयोगलाई बढाउन विज्ञ समूह गठन गर्नुपर्नेमा त्यस्तो समिति भने गठन गरिएको छैन । तामाङ सञ्चारकर्मीहरुको संस्था तामाङ पत्रकार संघले सञ्चारकर्मीद्वय राजु स्याङ्तान र शान्ति लामा वाइवालाई २०८१को तामाङ मिडिया अवार्ड प्रदान गरेको छ ।

बागमती प्रदेशका मुख्यमन्त्री लामाले राजधानीमा आयोजित एक कार्यक्रमका बीच सो अवार्ड प्रदान गर्नू भएको हो । नयाँ पत्रिका दैनिकमा समाचार सम्पादक स्याङतानले आदिवासी तामाङको पक्षमा लेख रचना तथा कविता र नाटक लेखन मार्फत समुदायलाई बिशिष्ट योगदान दिएको हुँदा सो पुरस्कार प्रदान गरिएको पुरस्कार छनौट समितिका संयोजक लक्ष्मी रुम्वाले जानकारी दिए ।

यसै गरी नेपाल टेलिभिजनमा कार्यरत शान्ति लामा वाइवा एक जुझारु र समूदायप्रति प्रतिबद्ध पत्रकार रहेकाले छनौट गरिएको बताइएको छ । दुवैलाई नगद पुरस्कार सहित अवार्ड प्रदान गरिएको छ ।

सोही समारोहमा मुख्यमन्त्री लामालाई तामाङ पत्रकार संघले अभिनन्दन गरेको छ । नेपालको शासकीय संरचनामा मूख्यमन्त्री हुने पहिलो व्यक्तिका रुपमा बहादुर सिंह लामा नियुक्त भएकोमा खुशी व्यक्त गर्दे संघले सो अभिनन्दन गरेको हो । अभिनन्दन पछि तामाङ भाषामै सम्बोधन गर्दै मूख्यमन्त्री लामाले संघीय तहमा अवसर पाउन कठिन रहेको बिचार राख्दै प्रदेश तहको जिम्मेवारीबाट तामाङलगायत आदिवासी समुदायमा आएको उत्साह सुखद भएको बताए ।

आफनो सम्बोधनका क्रममा उनले यो अवसरलाई सफल बनाउन समुदायको सहयोगको अपील पनि गरे । तामाङ पत्रकार संघका अध्यक्ष सुवास योन्जनले अध्यक्षताको आसनबाट संघको कार्ययोजनाबारे जानकारी गराएको थियो ।

## मध्यपुर......

त्यस्तै मठ मन्दिर, घर, निर्माण संरचना पूरा भएको अवसरमा पनि विभिन्न साँस्कृतिक झाँकि सहित साँज्या निकाल्ने गरिन्छ । जुन साहै रमाईलो हुन्छ । प्रहसनको रुपमा र नाचको रुपमा समेत निकालिने यस्ता झाँकी रमाईलो हुने गर्दछ । जसमा सो दिन नागचा, अष्ट मातृका, भतिमाली प्याखँ, लगायतका पुरातात्त्विक नाचहरु प्रहसन गर्ने गरिन्छ ।

सापारुको भोलिपल्ट अर्थात आज भदौं ५ गते मध्यपुर थिमि नगरपालिका वडा न ८ बोदेमा ऐतिहासिक, धार्मिक आस्था वोकेको निलवाराही गणनाच नचाईने गरिन्छ । १९ जनाको समुहमा चार दिनसम्म नचाईने यो नाच दर्शन गरे मुक्ति प्राप्त हुने, शुभ हुने जनबिश्वास रहेको हुन्छ । देवगणमा समाबेश हुन धेरै नीति नियमहरु पालना गर्नुपर्ने, धेरै साधना गर्नु पर्ने, एकपटक बसेपछि जिवित हुँदासम्म छोड्न नमिल्ने अनेकन नियमहरु रहेका छन् ।

त्यस्तै नाच अवधिभर देवगणका परिवारहरु समेत कडा नीतिनियममा वस्नुपर्ने हुन्छ । निलवाराही देवगणलाई दैनिक जीवनमा नाचवाहेकको समयमा पनि देउताकै रुपमा पुज्ने गरिन्छ । नाचको पहिलोदिन रातको १० बजेदेखि भोलिपल्ट बिहानसम्म जात्रा हुने गर्दछ ।

यस वर्ष मध्यपुर थिमि नगरपालिका वडा न ५ ताहानिवाट भैलः नाच निकालिने छ । धार्मिक आस्था बोकेको यो नाच नचाईदा देशमा शुभ हुने जनबिश्वास रहेको छ । अरुबेला कहिँकत्तै नचाउन नमिल्ने यो नाच धार्मिक अनुस्थानसहित तान्त्रिक बिधिवाट नचाईन्छ । दुई भैलः, दुई डाँगी, एक ज्यापुगँचासहित यो नाच नचाईन्छ ।

धेरै साधना तथा नियमको परिधिभित्र रहेर नचाउनु पर्ने यो नाच कठिन नाचहरु मध्य पर्दछ । नाचका देवगण देखि परिवारहरु समेत पनि कडा नियममा वस्नु पर्ने नियम रहेको छ । विगत बषहरुमा झै यो वर्ष वर्ष पनि युवाहरु सँस्कृति जगेर्नामा अगाडि बढेको छ । युवाहरुलाई अग्रज तथा टोलवासीहरुको आत्मिय साथ रहेको छ । जसले गर्दा भव्यरुपमा नाच प्रदर्शन हुने नाचको पहिलो दिन भदौं ५ गते राती ८:०० बजेबाट रातभर भैलः नाच नचाइने छ ।

यो वर्ष महाकाली नाच, भदौ ५ गतेदेखि राती ६:०० बजेबाट शुरु हुने नगदेशमा ५ वर्षपछि र थिमि दिगुटोलवाट पनि नचाईदैछ । जसको लागि युवाहरु, अग्रज गुरुहरु तथा संस्कृतीप्रेमी नगरवासीहरु महिनौ अगाडिबाट तयारीमा जुटेका थिए । जसले थिमिमा भदौ महिना पर्वको सांस्कृतिक महोत्सवको रुपमा रहने छ । महाकाली नाचको विशेषता ठूलो समूहमा मुकुन्डोसहित, पुरम्परागत बाजागाजाको सुमधुर तालमा नाच प्रदर्शन हुनु हो ।

ती नाचहरुले कृषि कर्ममा व्यस्त रहने तत्कालिन समयमा जनजीवनलाई उर्जा प्रदान गर्न ऋतु अनुसारको खानपान अनि मनोरञ्जन मार्फत साँस्कृतिक जीवनशैलीलाई जीवन्त रुप दिइएको छ । यसले मानव सभ्यताको गर्विलो ईतिहास बोकेको साँस्कृतिक नाचको अवलोकनबाट गर्न सकिन्छ ।

## जलवायु......

जलवायु परिवर्तनको जोखिमबाट जोगिने उदाहरणीय अभ्यास रहेको उल्लेख गरेको छ ।

यसैगरी रुकुम पूर्वको खामभाषी मगरहरुमा भूमि प्रति श्रद्धा गर्ने भूमे पुजाको परम्परा, खेतीबालमा लाग्ने रोग बिरुद्ध प्राकृतिक उपचारको पद्धति जलवायु परिवर्तन न्यूनिकरणका प्रथाजन्य अभ्यासहरु हुन् । बालीमा रोग नलागोस भनेर गाईको पिसाव, खरानी, लसुन, प्याज तथा कागतीको रस लगायतको जैविक औषधीबाट उपचार गर्ने परम्परा त्यस क्षेत्रमा पाइएको अनुसन्धान प्रतिवेदनमा उल्लेख छ ।

तराई क्षेत्रमा बसोबास गर्ने थारुहरुमा पनि जलवायु परिवर्तनको असर र प्रभाव अनुकूलन गर्ने अनेकौ प्रथाजन्य अभ्यासलाई अनुसन्धानले उजागर गरेको छ । मूलत बाढीजन्य प्रकोपबाट बच्ने उपायका रुपमा थारुहरु ठाँठीको घर बनाउने गर्दछन् । यस्तो घर जमिनको सतहभन्दा अग्लो हुने भएकाले बाढीजन्य प्रकोपबाट यस्ता बसोबासस्थलहरु तुलनात्मक रुपमा सुरक्षित हुन्छन् । त्यसरी नै माटोका भाँडाकुडा प्रयोग गर्ने चलन र घरको रंङ्ग रोगनका लागि रातो माटोको प्रयोगले रोगव्याधीबाट सुरक्षा हुने विश्वास रहेको छ ।

पानीको संकट टार्ने प्रथाजन्य परम्पराहरु

जलवायु परिवर्तनका कारण साझा संकटका रुपमा पानीको अभाव देखिएको अनुसन्धानकर्ता डा. शेर्पाले बताए । हिमाल, पहाड र तराईमा पानीको मूल सुक्ने, अति वर्षा, न्युन वर्षा तथा खडेरी जलवायु परिवर्तनले पारेको प्रभाव हो । पानीको अभावले कृषि उपजको उत्पादन हुन नसकेका कारण खाद्यान्न संकट व्यहोर्नू परिरहेको छ । यस्तो संकट टार्न पनि आदिवासीहरुले खास गरेर आदिवासी महिलाहरुले विशेष जुक्तिको प्रयोग गरिरहेका छन् ।

व्याँसी (रोङ) महिलाहरुले दूइ मुहानको पानी मिसाएर पुजा गर्ने परम्परा रहेको दार्चुलाकी शुक्लावती बुढाथोकीले बताएकी छिन् । 'व्याँसी (रोङ)हरुको नुबुसाङ्वो प्रथाजन्य साँस्कृतिक परम्परा रहेको छ, यसबाट पनि खाद्यान्न वाली र पानीजन्य संकट समाधान हुने हाम्रो विश्वास छ ।'

रुकुम पूर्वतिर भने भ्यागुताको बिहे गरिदिने परम्परा छ । भूमे गाउँपालिककी उपाध्यक्षसमेत रहकी खाम मगर भाषी सविना बुढा मगरले यस्तो परम्परा बारे जानकारी दिदै भने -'लामो समयसम्म खडेरी लागेमा भ्यागुताको बिहे गरिदिने परम्परा हाम्रा पुर्खाले चलाएका छन् । यो कार्य गरेमा वर्षाद हुने हाम्रो विश्वास छ ।'

उता बर्दियाका थारुहरुले भने महिलाको वस्त्र पुरुषले र पुरुषको वस्त्र महिलाले लगाएर सार्वजनिक प्रदर्शन गरे पछि पानी पर्ने विश्वास गरिन्छ । खडेरी परेमा यस्तो कपडा लगाएर सार्वजनिक स्थानमा बाजागाजा सहित ठूलो स्वरमा पानी माँग्ने चलन रहेको बर्दियाकी राधा चौधरीले बताए । उनका अनुसार बाढी नियन्त्रण गर्नका लागि देशावर जस्ता परम्परागत कुलापानी समिति त्यता तिर सक्रिय रहेको छ ।

आदिवासी समाजमा प्रथा, परम्परा तथा सामाजिक, साँस्कृतिक क्रियाकलाप र प्रथाजन्य स्वशासनमा प्रथाजनित संस्थाहरुको भूमिका महत्वपुर्ण रहेको अनुसन्धान प्रतिवेदनमा उल्लेख छ । कार्यक्रममा सहभागी भएका बर्दियाका परशुराम चौधरीका अनुसार थारु समुदायमा बरघर नामक प्रथाजनित संस्थाले प्राकृतिक स्रोतको दीगो व्यवस्थापन, प्रकोप पीडितका लागि उद्धार तथा सहयोग गर्ने काम गर्दछ ।

त्यसै गरी हिमाली भेगमा व्याँसी (रोङ) हरुमा बडा नामक प्रथाजनित संस्थाले सामाजिक संस्कृतिक नीति र नियम निर्माण र कार्यन्वयन गर्ने गर्दछ । मिराङसिरी नामक प्रथा परम्परा पनि सो समाजमा प्रचलित रहेको शुक्लावती बढाथोकीले जानकारी दिए । यस्तै रुकम पूर्वको मगर समाजमा खर्दारी तथा झारा प्रथा सक्रिय रहेको पाइएको डा. शेर्पाले बताए ।

कार्यक्रममा सिप्रेडका अध्यक्ष डा. पासाङ शेर्पाले आदिवासीको प्रथाजनित संस्थाको मान्यता, विश्वासमा आदिवासी महिलाको भूमिका महत्वपूर्ण रहेको बताउँदै आफनो भूमि, भूभाग र भूक्षेत्र भित्र ज्ञानको पुस्तान्तरण गर्न शिक्षा प्रणालीमा सुधार र क्षमता अभिबृद्धि, आत्मनिर्णयको अधिकार तथा स्वतन्त्र, पूर्व, सुसूचित सहमति एफपीक लागू गर्ने लगायतमा ध्यान दिनु पर्ने जिकीर गरे ।

कार्यक्रममा नेपालस्थित युएन वुमनकी आवासीय प्रतिनिधि पत्रिसिया फर्नान्डेज र नेपाल स्थित फिनल्याण्ड राजदुतावासका विकास सहयोग कार्यक्रमकी प्रमूख सारा अलानेनले जलवायु विपतका बेला आदिवासी ज्ञानले सकारात्मक योगदान दिएको टिप्पणी गरे । कार्यक्रममा वन तथा वातावरण मन्त्रालयको रेड कार्यन्वयन केन्द्रका प्रमूख केशव पुडासैनी र महिला तथा बालबालिका मन्त्रालयका उपसचिव केशव उपाध्ययले प्रथाजनित ज्ञानलाई राज्यका नीतिहरुले सम्बोधन गर्ने प्रयास गरेको धारणा राख्दै यस क्षेत्रमा थप अनुसन्धान गर्नु पर्ने आवश्यकता रहेको धारणा व्यक्त गरेका थिए ।

कार्यक्रममा विभिन्न आदिवासी सम्बद्ध संघसंस्था, विकास साझेदार, अनुसन्धानकर्ताहरु, विश्वविद्यालयका प्राध्यापक तथा विद्यार्थीहरु र सरकारी निकायका प्रतिनिधिहरुको सहभागिता रहेको थियो ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमिTIMES

# चलचित्र आँखाको नयाँ पोष्टर सार्वजनिक

काठमाडौं । सामाजिक विषयवस्तुमा निर्माण भएको चलचित्र 'आँखा' असोज ११ गतेबाट प्रदर्शनमा आउने भएको छ । निर्माण टिमले नयाँ पोष्टर सार्वजनिक गर्दै नयाँ प्रदर्शन मिति घोषणा गरेको छ । लामा सिनेमाको प्रस्तुतिमा तयार भएको सिनेमालाई जोन योंजनले लेखन तथा निर्देशन गरेका हुन् ।

चलचित्रमा स्मिता लामिछाने, आर के मेहता, निशा अधिकारी, बुद्धि तामाङ, विजय बराल, सरोज खनाल, पशुपति राई, कृष्णभक्त महर्जन, राजन खतिवडा, प्रविण खतिवडा, लुनिभा तुलाधर, रविन्द्र झा, रेनुका कार्की, अभयराज बराल, मोहन अभिलाषी लगायत थुप्रै कलाकारहरुले अभिनय गरेका छन् । बाल कलाकारको भुमिकामा प्रसन राई रहेका छन् । राईले चलचित्र गाउँ आएको बाटोमा समेत मुख्य भुमिका निर्वाह गरेका थिए ।

चलचित्रको पोष्टर र मुख्य भुमिकामा स्मिता लामिछाने र आर के मेहता देखिन्छन् । लामिछानेले यसअघि बाह्र सत्ताईस, म राजेश हमाल लगायतका थुप्रै चलचित्रहरुमा अभिनय गरिसकेकी छिन् भने आर के मेहता यसै चलचित्रमार्फत् डेब्यु गर्दैछन् । उनले यो चलचित्रको लागि १५ किलो वजन घटाएका थिए ।

रंगमञ्चमा लामो समय सक्रिय मेहताले शिल्पी थिएटरमा जेसिमो बेटा भर्सन, कोमा, मजिपा लाखे, नारी, के लाग्यो हाल्का ले, एल्लो कमेडी जस्ता थुप्रै नाटकहरु गरेका थिए । उनी 'हारजित' 'वीच', 'जिउँदो आकाश' नाटकका अभिनेता तथा निर्देशक पनि हुन् । उनले इटालीमा एकडेमिया डेल् आर्तेमा फिजिकल थिएटरको डिप्लोमा गरेर त्यही प्रशिक्षण पनि दिएका थिए । इटालीमा पनि उनले धेरै प्रदर्शनहरू गर्नुका साथै नेपालको मण्डला थिएटर, कान्तिपुर फिल्म एकेडेमी, एनएफडीसी, पिफिटमा पनि ओकर्सप दिएका थिए ।

चलचित्रलाई जौन योंजन आफैले निर्माण गरेका छन् । सहनिर्माताका रुपमा रेनुका कार्की रहेकी छिन् । ढाका टोपी फिल्मस्, कार्यक्रम नेपाल, साइलेन्ट एक्ट र ट्राइडेन्ट कन्सेप्टको सहकार्यमा तयार भएको चलचित्र 'आँखा'को छायांकन आलोक शुक्लाले गरेका हुन् ।

मानवता, सामाजिक दबाब, नैतिक र गरिबी जस्ता विभिन्न जटिल विषयवस्तुहरू अन्वेषण हुन जरुरी छन् । यो फिल्म आधुनिक समाजमा तल्लो वर्गको संघर्ष र बाँच्नका लागि मानिसहरू समयको कति लामो गहिराईसम्म जान्छन् भन्ने मार्मिक दृष्टिकोण भएको निर्देशक बताउँछन् । दुःख एक्लोपन जत्तिकै भयानक र त्रासपूर्ण हुन्छ, यहि परिधि भित्रको रमाइलो कथा 'आँखा' हो । निर्देशक योंजनले यसअघि बाह्र सत्ताईस र म राजेश हमाल निर्देशन गरिसकेका छन् । चलचित्र बाह्र सत्ताईस प्रदर्शन भएर पनि युट्युबमा आईसकेको छ भने म राजेश हमाल प्रदर्शनको तयारीमा रहेको छ । उनी नयाँ चलचित्र रोल नं. १ को निर्माणको तयारीमा लागेका छन् ।

b}lgs ?kdf ;dfrf/ x]g{sf] nflu nu Og ug'{xf];\ .
https://www.thimitimes.com.np/

# लोकार्नोमा शाहरूख : अभिनय, सिनेमा कला र हलिउड

एजेन्सी । 'सिनेमा हाम्रो समयको सबभन्दा प्रभावकारी र गहिरो प्रभाव छोड्ने कलात्मक माध्यम हो भन्ने मेरो विश्वास छ' ७७औं लोकार्नो फिल्म फेस्टिभलमा आफूलाई दिइएको करिअर अचिभमेन्ट अवार्ड स्वीकार गर्न स्टेजमा पुगेका बलिउड अभिनेता शाहरूख खानले करिब ८ हजार दर्शकसामु सिनेमा सम्बन्धी आफ्ना विचार राख्दै भनेका थिए ।

'मैले जीवनका केही वर्ष यो माध्यमको एउटा अंगका रूपमा बिताउन पाएँ । यो यात्राबाट मैले केही सिकेको छु, अनुभूत गरेको छु', उनले त्यसपछि सिनेमा कलाको महत्व र यसको प्रभावकारिता बारे छोटोमा बोले ।

स्विट्जरल्यान्डको लोकार्नो शहरमा आयोजना हुने यो चलचित्र महोत्सव युरोपको पुरानो र महत्वपूर्ण फिल्म महोत्सवमध्ये एक मानिन्छ । झन्डै ८ हजार दर्शकले शहरको चोकमा खुला आकाशमुनि रातको समयमा फिल्म हेर्ने यहाँको सो 'पियाजा ग्रान्डे' यसको भव्यताका लागि प्रसिद्ध छ । विश्व सिनेमाका ठूल्ठूला स्टारहरू आफ्ना फिल्म सहित यहाँ पुग्छन् । यसपालि मीनबहादुर भाम निर्देशित नेपाली फिल्म साम्बाला को प्रदर्शन पनि यही स्क्रिनमा भएको थियो । शाहरूखले अभिनय गरेको संजयलीला भंसाली निर्देशित फिल्म देवदास को पनि यहाँ प्रदर्शन गरिएको थियो ।

'मैले घमन्ड गरे जस्तो नसुनियोस्, मैले आफ्ना दर्शक र प्रशंसकलाई निराश बनाउन मिल्दैन । मलाई भारत, यस क्षेत्र र विश्वका दर्शकले जुन किसिमको माया, प्रेम, आदर र स्थान दिएका छन् त्यसको ख्याल र कदर गर्नु मेरो कर्तव्य हो । मलाई हलिउडबाट त्यस किसिमको फिल्मको अफर आएको छैन ।'

'प्रेम विना कुनै सृजना सम्भव छैन, प्रेम त्यस्तो भाषा हो, जसले सबै भावलाई प्रवाह गर्न सक्छ', उनले भाषणका क्रममा भने । उनले सिनेमाका बारे भने, 'सिनेमा कला भनेको यस्तो हो, यसले राजनीतिक र नैतिक बन्धन एवं सचेतना विना नै जीवनको चित्र कोर्न सक्छ । मानव जीवनको कलात्मक प्रस्तुति नै सिनेमा हो ।'

'सृजनात्मकता, प्रेम र अरूलाई आनन्द दिनु भनेको मेरा लागि एउटै कुरा हुन' शाहरूखले भने, 'सिनेमाले जस्तो मानवका सबै भावनालाई प्रभावकारी ढंगले अभिव्यक्त गर्ने कला अर्को छैन । म पछिल्लो ३५ वर्षदेखि यही काम गर्दै आएको छु', उनले भने ।

सन् १९९२ मा दिवाना बाट बलिउडको ठूलो पर्दामा उदाउनुअघि शाहरूखले थुप्रै टेलि शृंखलाहरूमा अभिनय गरेका थिए । दिल्लीमा बेरी जोनको समूहमा मनोज बाजपेयी, रघुवीर यादवलगायतसँग नाटकहरूमा अभिनय गरेका शाहरूखले बलिउड फिल्मका माध्यमबाट विश्वव्यापी परिचय र प्रभाव निर्माण गरे । यसकै कदर गर्दै यसपालि लोकार्नोले उनलाई एचिभमेन्ट अवार्डले सम्मान गरेको हो ।

शाहरूख खानले प्राप्त गरेको यो सम्मानको भारत र विश्वभरका मिडियामा चर्चा भएको छ । उनको भाषण र अन्तर्वार्ताहरूको पनि चर्चा छ । आमसञ्चार विषय अध्ययन गरेर सिनेमामा लागेका शाहरूखलाई यसै पनि वाक्पटु मानिन्छ । लोकार्नोमा उनले भेराइटी सँगको अन्तर्वार्तामा सिनेमा, आफ्नो करिअर र सम्भावनाहरूबारे प्रष्टताका साथ बोलेका छन् ।

भेराइटी ले उनलाई सोध्यो, 'तपाईंले यतिका वर्षमा एउटा पनि हलिउड फिल्म गर्नुभएको छैन । कस्तो अवस्था र शर्तमा तपाईं हलिउडका फिल्म गर्नुहुन्छ ?' यसको उत्तरमा शाहरूखले भनेका छन्, 'मानिसहरूसँगको पहुँचका हिसाबले हलिउड संसारमै उत्कृष्ट छ । तर, म आफू त्यसरी फिल्म छनोट गर्ने वा कुनै शर्त राख्ने स्थानमा छु जस्तो लाग्दैन । आशा गरौं, कुनै दिन त्यस्तो मौका आएछ भने मैले राम्रोसँग अंग्रेजीचाहिं बोल्न सकुँ ! मैले घमन्ड गरे जस्तो नसुनियोस्, तर त्यो मलाई भारतीय दर्शकले दिएको ओहदासँग मिल्ने खालको चाहिं हुनुपर्छ । मैले आफ्ना दर्शक र प्रशंसकलाई निराश बनाउन मिल्दैन ।'

'सिनेमा भनेको आमसञ्चारको माध्यम हो । साधारण अर्थमा भन्ने हो भने यसले धेरै मानिससँग संवाद गर्न सक्नुपर्छ । यसले कुनै पनि कुरालाई बौद्धिकतामा पेश गर्नुहुँदैन । सिनेमाले उपदेश दिनुहुँदैन । र, मैले भन्दै आएको छु फिल्मले नैतिक पाठ पढाउने पनि होइन, यसलाई नैतिकताको कुरा मान्नुहुँदैन । ती मेरा नचलेका केही फिल्महरू ज्यादै नै व्यक्तिगत भए ।'

त्यसपछि यो प्रश्नको उत्तरमा शाहरूखले आफूलाई भारत र यो क्षेत्रका दर्शकले जुन किसिमको माया, प्रेम, आदर र स्थान दिएका छन् त्यसको ख्याल र कदर गर्नु आफ्नो कर्तव्य भएको बताएका छन् । उनले भनेका छन्, 'भारत, यस क्षेत्र र विश्वभरका दर्शकले म र मेरो परिवारलाई कुन स्तरको माया र सम्मान दिनुभएको छ भन्ने मलाई थाहा छ । मैले यसको जहिल्यै सम्मान गर्नुपर्छ । त्यसैले मैले चाहे कुनै हिन्दी फिल्म गरुँ वा दक्षिण भारतीय कुनै फिल्म, फ्रेन्च फिल्म वा हलिउड फिल्म नै किन नहोस्, मैले दर्शकको त्यो माया र प्रेमको सधैं सम्मान हुने गरी गर्नुपर्छ । मलाई त्यस किसिमको भूमिका अहिलेसम्म हलिउडबाट अफर भएको छैन । त्यहाँ कुनै एजेन्ट पनि छैनन् । इमानदार भएर भन्ने हो भने म भूमिका, फिल्महरू खोज्दै गएको पनि छैन ।'

शाहरूख खानले आफ्नो सिनेमालाई लिएर सपना पनि सुनाएका छन् । 'मेरो सपना छ कि, कुनै दिन हिन्दी फिल्मलाई पनि विश्वव्यापी रूपमा हलिउड फिल्मलाई जसरी हेरियोस् । म त्यस्तो भारतीय फिल्मको हिस्सा बन्न चाहन्छु चाहे त्यो अभिनेताका रूपमा होस् या लाइटम्यानका रूपमा होस् या निर्माताका रूपमा होस्, लेखक वा प्रस्तुतकर्ताका रूपमा होस् । म भारतीय कथालाई संसारले त्यसरी स्वीकार गरेको हेर्न र त्यसको हिस्सा बन्न चाहन्छु ।'

सिनेमाकै बारे कुरा गर्दा शाहरूखले भेराइटी लाई 'पठान' भन्दा अघिका उनका फिल्महरू किन चलेनन् र उनले किन ब्रेक लिए भन्नेबारे पनि बताएका छन् । उनले भनेका छन्, 'जिरो, ह्वेन ह्यारी मेट सेजल र फ्यान जस्ता फिल्महरू मैले मन पराएरै खेलेको हुँ । तर, सिनेमा भनेको आमसञ्चारको माध्यम हो । साधारण अर्थमा भन्ने हो भने यसले धेरै मानिससँग संवाद गर्न सक्नुपर्छ । यसले कुनै पनि कुरालाई बौद्धिकतामा पेश गर्नुहुँदैन । सिनेमाले उपदेश दिनुहुँदैन । र, मैले भन्दै आएको छु फिल्मले नैतिक पाठ पढाउने पनि होइन, यसलाई नैतिकताको कुरा मान्नुहुँदैन । ती मेरा नचलेका केही फिल्महरू ज्यादै नै व्यक्तिगत भए । त्यसकारण तिनले धेरै दर्शकसँग संवाद गर्नै सकेनन् । यसकारण ती सफल भएनन् ।'

उनले आफ्नो डेढ वर्षभन्दा लामो 'ब्रेक'का विषयमा पनि बोलेका छन् । 'मैले फिल्मका असफलताका कारण ब्रेक लिएको होइन । मलाई पहिलेदेखि नै के थियो भने, जुन दिन बिहान उठ्दा मलाई आज सट दिन मन छैन भन्ने लाग्छ, त्यसदिन म सुटिङ गर्ने छैन । म जनवरीमा एउटा फिल्मको सुटिङ सुरु गर्दैथिएँ, डिसेम्बरको एक दिन मैले बिहानै निर्मातालाई फोन गरेर अत्यन्त अव्यावसायिक तरिकाले 'म यो फिल्मको सुटमा आउन चाहन्नँ' भनेर भनें । उनले मलाई यो सम्भवै छैन, तिमी काम नगरी एक मिनेट पनि बस्न सक्दैनौ, त्यसैले फिल्म मन परेको छैन भने भन नत्र म काम गर्दिनँ भनेर नभन भने । तिनै निर्माताले डेढ वर्षपछि फोन गरेर भने- म साँच्चिकै अचम्भित भएँ । तिमी काम नगरी यत्रो समय कसरी बस्न सक्यौ ? मेरा लागि अभिनय भनेको एकदमै अर्गानिक कुरा हो । मन नलागी नलागी म अभिनय गर्न सक्दिनँ ।'



प्रकाशक/कार्यकारी सम्पादकः bLks >]i7, सम्पादकः bLlksf >]i7, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web Portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY





वर्ष १८ | अङ्क ०७ | ने.सं. ११४४ | भाद्र १२ गते बुधबार, २०८१ | 28 Aug. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/-


## प्रतिनिधिसभामा प्रचण्डको सरकारमाथि प्रश्नै प्रश्न !




काठमाडौं । प्रमुख प्रतिपक्षी दलका नेता एवं नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले आफूहरूलाई कमजोर र निरीह प्रतिपक्ष नठान्न सत्तापक्षलाई चेतावनी दिएको छ । प्रतिनिधिसभाको मंगलवारको बैठकलाई सम्बोधन गर्दै प्रचण्डले आफूहरू बलियो प्रतिपक्षको रूपमा अघि बढ्ने बताएका हुन् ।

'यो सम्मानित संसदमा मैले पटकपटक भनिरहेको छु , आमजनतामा ठुलो निराशा र मोहभंग छ, ठुलो असन्तोष छ । यो संसद्सहित हामी सबै दल जनताको ठुलो निगरानीमा छौं । नेपाली कांग्रेस र नेकपा एमालेका साथीहरूलाई मेरो अनुरोध छ, जनता अहिलेको राजनीतिक शैलीसँग, चरित्रसँग, व्यवहारसँग रिसाएको छ '- उनले भने- ' प्राविधिकरुपमा तपाईंहरू ठुला हुनुहोला तर जनतासँगको तपाईंहरूको सम्बन्ध एकदमै कमजोर भएको छ । जनतामा ठुलो असन्तोष, घृणा र आक्रोश छ । लोकतन्त्रको सर्भिसिङबिना अब जनतालाई आश्वस्त गर्न सकिँदैन । यही भएर हामीले सुशासनको एउटा अभियान सुरु गरेका थियौं, त्यसलाई तपाईंहरूले भत्काइसक्नुभयो । दुई ठुला पार्टी मिलेर बेथिति थप्दै जाँदा कतै यो व्यवस्था नै सङ्कटमा पर्ने हो कि भन्ने मेरो चिन्ता छ ।'

'सत्तासीन साथीहरूलाई मेरो अनुरोध छ, सङ्ख्याको भ्रममा नपरौं, सत्यसँग साक्षात्कार गरौं । धेरै टाढाका, अघिका, इतिहासका ठुला शिक्षा म भन्दिनँ, छेवैका श्रीलंका र बंगलादेशका घटनाबाट सिकौं । श्रीलंकामा राजापाक्षेजी सङ्ख्याको सङ्कटले बाहिरिनुभएको हो ? होइन'- अध्यक्ष प्रचण्डले भने- ' बंगलादेशी पार्लियामेन्टलाई त अवामी लिग र त्यही गठबन्धनको एकलौटी प्रतिनिधित्वको वन पार्टी पार्लियामेन्ट भनिन्थ्यो । त्यो थियो, अस्ति जनवरीको निर्वाचनको परिणाम, हाम्रोभन्दा तेह्र महिना कान्छो । तपाईंहरू जोडतोडको दुई तिहाइको घमन्डमा हुनुहुन्छ भने यो घमण्डबाट बिउँझनोस् । जनताको विवेकको अवमूल्यन

बाँकी पेज ७ मा

## सिद्धिदासको पालादेखि गरिएको संघर्ष अहिलेको प्रतिफल : मल्ल के. सुन्दर

काठमाडौं । नेवाः जागरण मञ्चको आयोजनामा गत शुक्रबार लिंकरोड, ढल्कोस्थित नेपाः ब्यांक्वेटमा भाषा आयोगसँग सम्बन्धित विषयमा एक अन्तरक्रिया कार्यक्रम सम्पन्न भयो ।

मञ्चका अध्यक्ष सुजीव बज्राचार्यले सहजीकरण गरेको उक्त कार्यक्रममा विभिन्न सरोकारवाला व्यक्तित्वहरूले आ-आफ्नो मन्तव्य व्यक्त गरेका थिए । अन्तरक्रिया कार्यक्रममा बोल्दै नेवाः अगुवा मल्ल के. सुन्दरले नेपालभाषाका महाकवि सिद्धिदास महाजुको पालादेखि गरिँदै आएको संघर्षबाट अहिलेको अधिकार प्राप्त भएकोले भाषा आयोगलाई आवश्यक सहयोग गर्न सबै तयार हुनुपर्ने बताए । कर्मचारीतन्त्रको माखेसाङ्लोबाट जोगाउँदै भाषा आयोगलाई काम गर्ने सहज वातावरण बनाइदिनुपर्नेमा आयोगकै विरुद्ध आन्दोलन गर्ने धम्की कतिपयले दिनुलाई मल्लले अप्रासङ्गिक कार्य भएको बताए । उनले आयोगलाई 'राष्ट्रिय भाषा सम्मेलन'को आयोजना गर्न समेत सुझाउ दिएको छ ।

भाषा आयोगका सदस्य सुरेश किरण मानन्धरले आयोगले आफ्नै रफ्तारमा काम गरिरहेको भएतापनि त्यहाँभित्र अनेक व्यवधानसमेत रहेको र त्यस्ता व्यवधान आयोग एक्लैले पन्छाएर अगाडि बढ्न गाह्रो हुनेहुँदा सरोकारवालाहरुले पनि यसमा सचेत भएर सहयोग गर्नुपर्ने आग्रह गरे ।

सोही अन्तरक्रिया कार्यक्रममा राजनीतिज्ञ राजेन्द्र श्रेष्ठले अहिले एआईको जमाना आइसकेकोले भाषालाई प्रविधिमैत्री बनाउनुपर्ने सुझाव दिए । बागमती प्रदेशका सभासद् एवं पूर्व संस्कृति, पर्यटन तथा सहकारी मन्त्री शैलेन्द्र बज्राचार्यले

बाँकी पेज ७ मा

## समयमा कर तिर्न थिमि नगरपालिकाको आग्रह



मध्यपुर थिमि । मध्यपुर थिमि नगरपालिकाले 'समयमा कर तिर्नुहोस, छुटैछुट पाउनुहोस' योजना सार्वजनिक गरेको छ । नगरपालिकाले कर उत्प्रेरणा कार्यक्रम अन्तर्गत करदातालाई विशेष सहुलियत दिन चालु आर्थिक वर्ष २०८१/०८२ मा कर तिर्दा विभिन्न छुट तथा सहुलियतको योजना ल्याएको हो ।

जसअनुसार २०८१ श्रावणदेखि असोज महिना भित्रमा सम्पत्ति कर बुझाएमा आ.व. २०८१/०८२ मा लाग्ने करमा १० प्रतिशत छुटको व्यवस्था गरिएको छ ।

यस्तै अघिल्ला वर्षहरूको समेत सम्पत्ति करमा छुटको व्यवस्था गरेको नगरपालिकाको राजश्व शाखा प्रमुख रविन श्रेष्ठले जानकारी दिए । उनका अनुसार करदाताहरूले २०८१ श्रावण देखी असोज भित्र कर बुझाएमा अघिल्लो ३ बर्षको बक्यौतामा लाग्ने जरिवाना छुट गरिएको छ ।

नगरपालिकाले नयाँ व्यवसाय दर्तालाई प्रोत्साहन गर्न आर्थिक बर्ष २०७४/०७५ लाई आधार बर्ष मानी उक्त आर्थिक बर्ष भन्दा अगाडिको व्यवसाय कर छुट गरिएको छ । यसैगरी २०८१

बाँकी पेज ७ मा

## कर्मचारीले फाइल लुकाउने प्रमुखको आरोप



भक्तपुर । जिल्ला समन्वय समिति (जिसस) भक्तपुरका प्रमुख ईश्वर बहादुर थापाले कर्मचारीहरुले गैर सरकारी संस्था (गैसस)को फाइल लुकाउने गरेका आरोप लगाएका छन् । प्राकृतिक श्रोत द्वन्द व्यवस्थापन केन्द्र नेपालले आयोजना गरेको जिल्ला समन्वय एवं सल्लाहकार समितिको बैठकमा आइतवार थापाले सो खुलासा गरेका हुन् ।

"गैससले कार्यक्रम स्विकृतिका लागि पेश गरेका फाइल कर्मचारीले लुकाउने गरेका छन् ।" उनले भने ।

उनले गैससले जिल्लामा सञ्चालन गर्ने कार्यक्रम जिससबाट स्विकृत गराउनुपर्ने कानूनी व्यवस्था भएपनि केही संस्थाले मात्र स्विकृती लिने गरेको तर, ठूला र धेरै बजेट भएका कार्यक्रमहरु स्विकृतीका लागि नआउने गरेका गुनासो गरे ।

"केही साना कार्यक्रमको अनुमतिका लागि

बाँकी पेज ७ मा

## जनतालाई आत्मीयताका साथ सेवा उपलब्ध गराउनुपर्ने- प्रम ओली



काठमाडौं । प्रधानमन्त्री केपी शर्मा ओलीले नयाँ आधुनिक र सुविधा सम्पन्न कार्यालय भवन निर्माण गर्न सफल भएकोमा बधाई दिँदै यस कार्यालयबाट जनतालाई गुणस्तरीय, आत्मीयतापूर्ण र परोपकारी भावका साथ सेवा सुविधा उपलब्ध गराउनु पर्ने बताउनुभएको छ ।

जिल्ला प्रहरी परिसर काठमाडौं भद्रकालीको नवनिर्मित कार्यालय भवन

बाँकी पेज ७ मा

## भ्रष्टाचार प्रमाणित गरे एक लाख पुरस्कार दिने मेयर थापाको उद्घोष

भक्तपुर । सूर्यविनायक नगरपालिकाका प्रमुख बासुदेव थापाले १ रुपैयाँको भष्टाचार प्रमाणित गर्नेलाई १ लाख रुपैयाँ पुरस्कार प्रदान गर्ने बताएका छन् । आफूले भ्रष्टाचार नगर्ने र गर्न पनि नदिने जिकिर गर्दै उनले सोकुरा बताएका हुन् ।

श्रावणी मेला समापन कार्यक्रममा बिहीवार डोलेश्वर महादेवको अगाडी उभिएर उनले भने, "मैले एक रुपैयाँ मात्र पनि भ्रष्टाचार गरेको प्रमाण ल्याउनुस, एक लाख रुपैयाँ पुरस्कार दिन्छु ।" आफू किसानको छोरा भएको र खानपुग्ने जग्गाजमिन रहेको भन्दै भ्रष्टाचार गर्नु नपर्ने उनको भनाइ छ । "मेरो ३ जनाको परिवारमा छोरा अमेरिकामा सरकारी जागिरे छ, हामी दुई बुढाबुढीलाई भ्रष्टाचार गरेर खानुपर्ने अवस्था छैन ।" उनले भने ।

काम नपाएका अल्छीहरुले सामाजिक संजालमा सूर्यविनायकमा भ्रष्टाचार छ भन्दै काम देखाएका उनले आरोप लगाएका छन् । त्यसकै पछिपछि केही पत्रकार कुदेका उनको आरोप छ ।

नगर प्रमुख थापाले आफ्नो पारिश्रमिक भत्ता भन्दा बढी २७ लाख रुपैयाँ आफूले अघिल्लो कार्यकालमा सामाजिक सेवामा लगाएको जानकारी गराउदैं यो कार्यकालमा पनि पारिश्रमिक भत्ता सूर्यविनायककै सेवामा खर्च गर्ने जिकिर गरे । पत्रकार सम्मेलननै गरी यसबारे जानकारी गराउने उनको भनाइ छ ।

नगरपालिकाले शिक्षा, स्वास्थ्य र खानेपानीलाई विशेष प्राथमिकताका साथ् अघि बढाएको उनले बताए । नगरका फराकिला र कालोपत्रे बाटोघाटो र भौतिक संरचनाले सूर्यविनायकको बिकासबारे बताउने भन्दै उनले कृषि र पर्यटनलाई सम्वृद्धिको आधार बनाउन तल्लीन रहेको तथ्य पनि प्रस्तुत गरे ।

डोलेश्वर महादेव केदारनाथको शिर घोषणा भएको १५ वर्ष पूरा भएर १६ वर्षमा प्रवेश गरेको र दिन प्रतिदिन पर्यटकको आकर्षण बढ्दै गएको उनले बताए । स्थानीय सरकारको

बाँकी पेज ७ मा

## सन्दर्भ : नेपालको सहकारी र सहकारी ऐन - २०७९ र सहकारी नियमावली - २०८० र सहकारी अभियान !

विजयकृष्ण श्रेष्ठ

नेपालमा सहकारीको बिकासक्रम शुरु भएको ७ दशक नाघिसकेको छ । यो बिचमा सहकारी अभियानले धेरै आरोह अबरोह पार गरिसकेको छ । पूँजी परिचालनबाट स्वरोजगार, रोजगार समृद्धि प्राप्त गर्ने लक्ष्यबाट प्रेरित भएको सहकारी अभियान देशैभरी फैलिएको छ । वर्तमान समयमा सबैभन्दा बढी सञ्जाल भएको संस्था सहकारी नै हो । देशका कुनाकन्दरासम्म यो अभियानले बैंकिङ पहुँच सुनिस्चित गरेको छ । सदसयहरुकै पूँजी उचित ज्ञान क्षमता, योजना, आबश्यकता भएका सदस्यहरुमा लगानी गरी स्वरोजगार, रोजगार, उपयोगिता सृजना मार्फत सफलता र समृद्धि प्राप्त भएको उदाहरण हाम्रो समाजमा मनग्य भेटिन्छन् । ऋण लगानीबाट प्राप्त प्रतिफलसमेत सदस्यहरु मझ नै बोनसको रुपमा बितरण गरि सदस्य केन्द्रित व्यवसाय सहकारीले गरिरहेको छ । त्यतिमात्र होइन सदस्यहरुको सामाजिक, उन्नयनका लागि पनि सहकारी अभियान प्रमुख साधनको रुपमा अगाडि बढेको छ ।

आज देशैभर कुल ३१,३७३ सहकारी संस्थाहरु रहेको जसमा ७३,२१,२१८ (७३ लाख २१ हजार २१८) सदस्य संख्या रहेको, शेयर पूँजी मात्र करिव ९४ अरव १५ करोड तथा कारोवार ४ खर्व ७८ अर्व ३ करोड पुगेको त्यस्तै ४ खर्व २६ अर्व ३५ करोड सदस्यहरुमा ऋण लगानी भएको र प्रत्यक्ष



रोजगारी ९३ हजार ७७१ जनालाई दिएको तथा अप्रत्यक्ष रुपमा लाखौं जनतालाई रोजगारी प्रदान गरेको तथ्यांक सहकारी क्षेत्र सुधार कार्यदल-२०८०ले तात्कालिन सम्माननिय प्रधानमन्त्री पुष्पकमल दाहाललाई बुझाएको प्रतिबेदनमा

बाँकी पेज २ मा

वर्ष १८ अङ्क ०७ २०८१ भाद्र १२ गते बुधबार
28 Aug. 2024 Wednesday

थिमि TIMES

## सन्दर्भः नेपालको.......

उल्लेख छ ।

सहकारी बिभागले -२०७७ सालमा संकलन गरेको तथ्यांक अनुसार बागमती प्रदेश सबैभन्दा धेरै सहकारी संस्था रहेको प्रदेशको रुपमा रहेको छ। जहाँ १०,४१८ वटा सहकारी संस्था रहेको छ । देशैभरी संचालित सहकारीहरु मध्य बागमती प्रदेशमा मात्रै ३५% सहकारी रहेको छ त्यस्तै सदस्य संख्या २७,१७,४६९ सहित बागमती प्रदेश देशैभरिमा सबैभन्दा अगाडि रहेको छ। बागमती प्रदेशभित्र संचालित सहकारीले बचत संकलन २ खर्व गरेको ऋण प्रवाह १ खर्व ९९ अर्व ८६ करोड रहेको छ । बागमती प्रदेशमा मात्र २३,८९२ जनाले प्रत्यक्ष रोजगारी प्राप्त गरेको तथ्यांक रहेको छ । २०७७ सालको सहकारी बिभागको यो तथ्यांक भन्दा हाल केही वृद्धि भैइसकेको हालै सहकारी क्षेत्र सुधार कार्यदलले दिएको तथ्यांकमा प्रस्तुत गरेको अबस्था छ ।

मध्यपुर थिमि नगरपालिका मात्र कार्य क्षेत्र रहेको १३६ वटा सहकारी रहेको छ । जसमा १५ अरव भन्दा माथि कारोवार रहेको छ र १ अरव ५० करोड भन्दा बढी शेयर पूँजी रहेको छ । जसबाट समग्ररुपमा बित्तीय क्षेत्रमा धेरै योगदान पुर्याईरहेको स्पष्ट छ । जसले गर्दा मध्यपुर नगरमा बित्तीय उपस्थिति दह्रो बनाएको छ फलस्वरूप रोजगारी तथा व्यावसायिकताको वातावरण बनेको छ । सहकारीको धेरै सकारात्मक पक्षहरु छन् । जसको कारण आज विश्वभरीनै सहकारी अभियान प्रगती पथ तर्फ उन्मुख छ । आज सहकारी अभियानमा सम्मिलित ब्यक्तिहरु राजनीति देखि सरकारको नेतृत्वसम्म पुगेको छ । त्यसको मुल कारण सहकारीले सदस्यहरुको ब्यक्तित्व बिकास, आर्थिक बिकास, सामाजिक बिकासमा सहयोग पुर्याउनु नै हो ।

तर बिडम्वना सहकारी अभियानलाई बदनाम बनाउन, सहकारी अभियानलाई पछाडी धकेल्न तथा कुत्सित उदेश्य पुर्तिगर्न केही कुतत्वहरु लागि परेकोछ । जसले सदस्यहरुमा लोभलालच देखाई बचत सकलन गर्ने र सकलित बचत आफै दुरुपयोग गर्ने गरेको छ जसले गर्दा सहकारी अभियान समस्यामा परेको छ । त्यो समस्यालाई सुधार गरी सहकारी अभियान अगाडी बढाउने नीति लिन जरुरी छ ।

सहकारी क्षेत्रलाई ब्यबस्थित गर्न मध्यपुर थिमि नगरपालिकाले अगाडी बढाएका केही कार्यहरुः

स्थानिय सरकार मध्यपुर थिमि नगरपालिकाको नेतृत्व जिम्मेवारीबाट बिमुखहुने पक्षमा पक्कै छैनौ त्यसैले हाम्रो ध्यान सदैव सहकारी क्षेत्रमा रहिरहयो । त्यसैले सर्वप्रथमतः हामीले सहकारी ऐन जारी गर्यौं । सहकारीलाई थप ब्यबस्थित, सुदृढ, मजबुत ,जिम्मेवार बनाउन केही ब्यबस्थाहरु गरेका छौँ । हामीलाई बिश्वास छ, ऐनमा भएका ब्यबस्थाहरुले पक्कै सहकारी संस्थाहरुको मनोवल उच्च बनाउने छ । ब्यबस्थित बनाउने छ । सहकारीकर्मीहरुमा कामगर्ने जोश जाँगर थपिनेछ । सरकारले सहकारीलाई नियन्त्रण मात्रै गर्ने होईन, आवश्यक मार्ग निर्देशन, सहयोग र साथ दिनुपर्छ अनिमात्रै सहकारी अभियान अगाडी बढ्न सक्छ भन्ने ध्ययका साथ मध्यपुर थिमि नगरपालिकाले तपसि समितिहरुको ब्यबस्था सहकारी ऐनमा गरेका छौँ ।

क) सहकारी निर्देशक समिति -कार्यक्षेत्र भित्र रहेका सहकारी संस्थाहरुलाई सहकारी मूल्य मान्यता अनुसार संचालन गर्न नीति निर्देशन प्रदान गर्ने ,ऐन तथा नियमावलीमा ब्यबस्था नभएका बिषयहरुमा ऐन र नियमावलीसङ्ग नबाझिने गरि नीति तथा कार्यक्रम लागू गर्न नगर सहकारी समितिलाई निर्देशन दिने ।

ख) सहकारी अनुगमन समिति - मध्यपर थिमि नगरपालिका क्षेत्र भित्र रहेका सहकारी संस्थाहरुको सुक्ष्म अनुगमन तथा नियमन गर्ने । नियमित अनुगमनले सहकारी सस्थाहरुमा रहेको समस्या प्रतिकुल हुनुभन्दा अगाडी पत्ता लाग्नेछ जसले सहकारीलाई स्वस्थ राख्नेछ । अनुचित स्वार्थ राखी खोलिएका सहकारीहरुमा समयमानै आवश्यक कारवाही गरिनेछ जसले गर्दा जनताको पुँजीको सुरक्षा हुनेछ, सहकारी अभियान पनि स्वस्थ, सुरक्षित रहनेछ ।

ग) सहकारी व्यवस्थापन समिति - सहकारी व्यवस्थापन समिति गठन गर्ने अधिकार ऐनमा कार्यपालिकाले गने व्यवस्था गरिएको छ । जसले समस्याग्रस्त सहकारीको व्यवस्थापन गरि जनतालाई बचत फिर्ता गर्ने काम गर्नेछ । कार्यपालिकाबाट सहकारी व्यवस्थापन समिति गठन भईसकेको छ ।

घ) सहकारी बचत तथा ऋण सुरक्षण कोष-यस कोषमा सहकारी संस्थाहरुको शेयर सहभागिता रहनेछ । संस्थाहरुले परिचालन गर्ने बचत तथा ऋण सुरक्षण व्यवस्थाको लागि यो कोषको व्यवस्था गरिएको हो । शेयर पूँजी ५ करोड रुपैयाको हुने । जसमा ६०% सहकारी संस्थाले बाँकी ४०% नगरपालिकाले ब्यहोर्ने ब्यबस्था गरिएको छ ।

ङ) कर्जा सुचना केन्द्र - सहकारीको खराव कर्जा हुन नदिन ऋणीहरुको जानकारी सहकारीलाई उपलब्ध गराउन नगरपालिकाले कर्जा सुचना केन्द्रको ब्यबस्था ऐन तथा नियमावलीमा व्यवस्था गरेको छ । जसको लागि आवश्यक सफ्टवेयर निर्माण प्रक्रिया अगाडी वढिरहेको छ ।

च) ऋण असुली न्यायधिकरण -सहकारी सस्थाले ऋण उठाउन नसकेको प्रतिकुल समयमा ऋण असुली न्यायधिकरणले उठाउने गरि ऐनमा ब्यबस्था गरेको छ ।

छ) स्थिरिकरण कोष - बचत तथा ऋण सहकारी संस्थाहरुलाई सम्भावित जोखिमबाट जोगाउन स्थिरिकरण कोष खडा गर्ने व्यवस्था ऐनमा गरिएको छ । जस्तै सहकारी संस्थाको तरलताको समस्या भएमा आवश्यक सहयोग गर्न, सहकारी संस्थाहरुको कोषहरुमा बाडिएको रकम नगरपालिकाको कोषमा मध्यपुर थिमि नगरपालिका कार्यक्षेत्र रहेका सहकारी संस्थाहरु समावेश हुनुपर्ने व्यवस्था गरेको छ ।

ज) सहकारी समन्वय समिति - मध्यपुर थिमि नगरपालिकाको समन्वयमा सहकारी क्षेत्रको विकासको लागि सहकारी संस्थाहरुको समन्वय समिति रहने व्यवस्था ऐनमा गरिएको छ ।

झ) कर्मचारी समन्वय समिति - ऐनमा सहकारी क्षेत्रमा कार्यरत कर्मचारीहरुको व्यावसायिक दक्षता अभिबृद्धि गर्न, व्यवस्थापकिय सीप अभिबृद्धि गर्न, असल अभ्यास आदानप्रदान मार्फत कर्मचारीहरुलाई दक्ष बनाई सहकारी क्षेत्रको बिकास, बिस्तारका लागि कर्मचारी समन्वय समिति गठन गर्न सकिने व्यवस्था गरिएको छ ।

लामो जनसङ्घर्षबाट प्राप्त उपलब्धि नेपालको मुल कानुन नेपालको संविधान २०७२ हो । नेपालको संविधान २०७२ मा स्थानिय सरकारलाई २२ वटा एकल अधिकारहरु प्रदान गरिएको छ । नेपालको संविधानको अनुसूची -८ मा स्थानिय सरकारको एकल अधिकार सुची समाबेश छ । जसको २ नम्बरमा सहकारी संस्था रहेको छ । त्यसैले एकल अधिकार सुचिमा रहेको हुनाले स्थानिय सरकार अन्तर्गत स्थानिय सरकारको एकल अधिकार क्षेत्रमा रहेका सहकारी संस्थाहरु दर्ता, सञ्चालन, नियमन, अनुगमन, व्यवस्थापन, गर्न वान्छनिय भएकोले मध्यपुर थिमि नगरपालिकाले सहकारी ऐन-२०७९ र सहकारी नियमावली २०८० जारी गरेको छ । साथै मध्यपुर थिमि नगरपालिकाले जारी गरेको ऐनको बिषयमा संघीय तथा प्रदेश सरकारको ऐनसङ्ग बाझिएको एकरुपता नभएको टिकटिप्पणी हुने गरेको छ । तर यो बिषय छैन किनकी नेपालको सबिधानले केन्द्र, प्रदेश, स्थानिय गरि तीन तहको राज्यप्रणाली लागू भैइसकेको वर्तमान परिप्रेक्षमा सहकारी संस्थाहरु पनि सोही अनुरुप तिनै तहको अन्तर्गत रहेको छ । जसको लागि एकल अधिकार क्षेत्रमा रहेको सहकारी संस्थाहरुको व्यवस्थापनको जिम्मेवारी आ-आफ्नै तहलाई हुने व्यवस्था कानुनमा रहेको हुँदा कानुन पनि सोही अनुरुप निर्माण गर्न जरुरी देखिएको छ। नत्र सहकारी संस्थाहरु व्यवस्थापन गर्न कठिनाई हुने स्पष्ट छ। त्यसैले स्थानिय सरकार मध्यपुर थिमि नगरपालिकाले सहकारी ऐनमा सहकारी संस्था सञ्चालनको लागि आवश्यक सवै नीतिगत विषय समेट्ने प्रयास गरेको छ ।

यो ऐन निर्माणमा सहकारीकर्मी मित्रहरुको धेरै साथ र सहयोग प्राप्त भएको थियो त्यस्तै सहकारीबिदको रुपमा रहेका नेफ्स्कुनका पुर्व अध्यक्ष, बौद्धिक ब्यक्तित्व कैलाश भक्त प्रधानाङ्गको मार्गनिर्देशन तथा बिशेष सहयोग रहेको थियो । उहाँले सहकारी क्षेत्रमा हासिल गरेको अनुभव, ज्ञान सीप खन्याउनु भएकोछ, जसको कारण मध्यपुर थिमिको सहकारी ऐन सहकारी क्षेत्रलाई अगाडी बढाउन साधन बन्ने बिश्वास लिएको छु ।

नेपालको संविधानको केन्द्र सरकार, प्रदेश सरकार र स्थानिय सरकारको साझा अधिकार सुचिको अनुसुची -९ भएको व्यवस्था अनुरुप सहकारी ऐन २०७९, नियमावली २०८० मा मध्यपुर थिमि कार्यक्षेत्र नरहेका संघ र प्रदेश अन्तर्गतका सहकारी संस्थाहरुको हकमा केन्द्र तथा प्रदेश ऐनमा भएको ब्यबस्था अनुरुप, आवश्यकताको आधारमा अनुगमन, नियमन नगरपालिकाले गर्ने ब्यबस्था गरेका छौँ । जसले गर्दा अहिले बढ्दो बिकृती हटाउदै सहकारी क्षेत्रलाई दोष मुक्त बनाउन सफल हुने बिश्वास नगरपालिकाले लिएको छ ।

सहकारी विभागले २०७७ सालमा नेपालमा रहेका सहकारीको विषयमा जारी गरिएको तथ्यांकलाई आधार लिंदा नेपालमा दर्ता रहेका सहकारी संस्थाहरुमा संघ, प्रदेश, स्थानिय तहमा गरि कुल २९,८८६ सहकारीहरुको तहगत विवरण तपसिल बमोजिम रहेको छ ।

१) संघ अन्तर्गतका सहकारी संख्या = १२५ वटा कुल ०.४१%

२) प्रदेश अन्तर्गत = ६००२(२०.०८%)

३) स्थानिय सरकार अन्तर्गत = २३७५९(७९.४९%) रहेको छ ।

प्रस्तुत तथ्यांकले स्थानिय सरकारलाई धेरै जिम्मेवारी बन्नु पर्ने देखाएको छ । नेपालभरी रहेको सहकारीहरु मध्य स्थानिय सरकार अन्तर्गत ७९.४९% सहकारी रहेको हुँदा, सहकारी अभियानलाई प्रभावकारी रुपमा अगाडी बढाई देश विकासको लक्ष्य हासिल गर्न अधिकार सम्पन्न स्थानिय सहकारी ऐन स्थानिय सरकारहरुले आ-आफ्नो माटो सुहाउँदो बनाउदै सहकारी संस्थाहरुको सवलिकरणमा ध्यानदिनु आवश्यक छ ।

स्थानिय सरकार मध्यपुर थिमिमा सहकारी अभियानको अबस्थाः

सहकारी बिभागले २०७७ सालमा जारी गरेको तथ्यांक अनुसार मध्यपुर थिमि नगरपालिका कार्यक्षेत्र रहेका कुल १३५ वटा सहकारी सस्थाहरु रहेको पुष्टि गरेको छ । जस अनुसार एक अरव बीस करोड ७ लाख १८ हजार सेयर पूँजी रहेको,बचत संकलन ८ अरव १० करोड २३ लाख ४७ हजार रहेकोछ ।

त्यस्तै मध्यपुर थिमि नगरपालिकाले संकलन गरेको दाता अनुसार हाल मध्यपुर थिमि नगरपालिकामा कुल १२८ वटा सहकारी संस्था कार्यरत रहेको छ जस अनुसार सेयर पूँजी १४२४०१२९८४ (एक अरव बयालिस करोड चालीस लाख बाह हजार नौसय चौरासी रहेको छ । त्यस्तै बचत संकलन ९६५५९८७१८२ (९ अरव ६५ करोड ५९ लाख ८७ हजार १८२) रहेको छ ।

मध्यपुर थिमि नगरपालिकाले सहकारी क्षेत्रको उन्नयनका लागि गरेको कामहरुः

हालै गठित समस्याग्रस्त सहकारी छानबिन समितिका संयोजक माननीय सुर्य थापाले नेपालमा सहकारी संस्था आवश्यक नभएको जुन अभिव्यक्ति दिनुभयो जसले सहकारी क्षेत्र तरङ्गीत बनेको छ । सहकारी अभियन्ताहरु, जनताहरुले चिन्ता ब्यक्त गरिरहेको छ । एक जिम्मेवार ब्यक्तिले यस्तो अभिव्यक्ति ब्यक्त गर्न नहुने बिचार ब्यक्त हुँदै उहाँको सो बक्तब्यको आलोचना भैरहेको छ । देश बिकासको लागि सहकारी अभियान अति आबश्यक अङ्ग हो त्यसैले त बिगतका सरकारले सहकारी देशको अर्थतन्त्रको तेस्रो खम्वाको रुपमा सहकारी अभियानलाई लिएको छ । हुन पनि सहकारी अभियानबाटै हामिले समृद्धि प्राप्त गर्ने धेरै आधारहरु छन् । सदस्यहरुमा स-साना रुपमा छरिएर रहेको रकमलाई बचत गर्ने बानी बसाई लगानी योग्य पूँजीमा रुपान्तरण गरि सदस्यहरु माझनै लगानी गरि व्यवसायिकता मार्फत रोजगार, स्वरोजगार बनाई समृद्धि प्राप्त गर्ने अभियानमा सहकारी अभियान अगाडी बढेको छ ।

सहकारीको आवश्यकतालाई बुझी यसलाई सुरक्षित रुपमा अगाडी बढाउनुपर्ने आबश्यकतालाई दृष्टिगत गरि मध्यपुर थिमि नगरपालिकाले सहकारी ऐन -२०७९, नियमावली -२०८० जारी गरिसकिएको छ साथै कार्यबिधी बन्ने चरणमा छ ।

सहकारी संस्थामा देखिएको समस्याः

१) सहकारी सञ्चालन सम्बंन्धित आवश्यक तालिमको अभावका कारण दक्ष जनशक्तिको अभाव रहनु ।

२) समस्या देखिनु अगाडी समस्या पत्ता लगाई समाधानको बाटो पहिल्याईदिने गरि अनुगमन नभएको ।

३) सहकारीको मूल्य मान्यता, ऐन कानुन प्रतिकुल हुनेगरी असम्बन्धित ब्यक्तिहरुबाट सहकारी सञ्चालन गरिएको ।

नगरपालिकाबाट भएका सहकारी सम्बंन्धि गतिबिधिहरु

१) सहकारी दिवसको अवसरमा नगरब्यापी सहकारी स्थापना दिवस नगरपालिकाको आयोजनामा भब्यरुपमा मनाईएको ।

२) स्थिरिकरण कोष संचालन गर्न २० लाख बजेट आर्थिक बर्ष २०८०-८१ देखि ब्यबस्था गरिएको ।

३) कर्जा सुचना केन्द्र संचालन गर्न सफ्टवेयर निर्माणको काम अन्तिम चरणमा पुगेको ।

४) बचत फिर्ता नपाएको गुनासो आएका सहकारीको संचालकहरुको सम्पत्ति रोक्का गरि कारवाही अगाडी बढाईएको ।

५) नेपालमै स्थानिय सरकारमध्य पहिलोपटक कार्यपालिका मार्फत समस्याग्रस्त सहकारी घोषणा गरी सदस्यहरुको बचत फिर्ताको प्रक्रिया व्यवस्थापन समिति मार्फत अगाडी बढाईएको ।

६) गोएमएल, कोपोमिस तालिम सञ्चालन भएको ।

७) अनलाइन प्रणाली मार्फत सहकारी सम्बन्धमा तालिम लिने मिल्ने गरि सफ्टवेयरको व्यवस्था गरिएको ।

सहकारी संस्थामा रहेका समस्या समाधान गर्न आबश्यक तालिम प्रदान गर्ने, नियमित अनुगमन गर्ने, ऐनमा भएको ब्यबस्थाहरु लागू गरि नगरपालिका क्षेत्र भित्र रहेका सहकारी सस्थाहरुको उन्नयन गर्ने उदेश्य नगरपालिकाले लिएको छ । जनताको वास्तविक हरपलको साथि सहकारी नै हो । अतः यसलाई शसक्त बनाउन नगरपालिका अगाडी बढेको छ । आउनुस सहकार्य गरौं ।

(श्रेष्ठ मध्यपुर थिमि नगर पालिकाका उपप्रमुख तथा न्यायिक समितिका संयोजक हुन् ।)

# गाजाको अवस्था विकराल बन्दै

एजेन्सी । गत अक्टोबर ७ मा हमासको आक्रमणपछि इजरायलले त्यसको प्रतिकार स्वरूप आक्रमण सुरु गरेको थियो । त्यो हवाइ आक्रमणले गाजाको जनजीवनदेखि हरेक क्षेत्रमा असर परेको छ । शिक्षा, क्यारियर र सहज जीवन त गाजामा एकदमै टाढाको विषय भएको छ, त्यहाँ बाच्नु नै पुरुषार्थ बनेको छ ।

पछिल्लो समय यत्ति धेरै खराब अवस्था आइसकेको छ कि रोगको सङ्क्रमणसम्मको जोखिम प्रत्येक दिन बढ्दो छ । पानी धमिलो हुन थालेको छ । चिकित्सकले चेतावनी दिइसकेका छन् । भूमध्यसागरीय क्षेत्रमा यो समस्या सबैभन्दा धेरै बढेको हो । डयर अल बलाहको तटीय क्षेत्रमा अन्तर्राष्ट्रिय सञ्चार माध्यमहरूले स्याटलाइटबाट लिएका दृश्यमा दूषित पानी र खराब वातावरणीय अवस्था प्रस्ट देख्न सकिन्छ ।

डेयर अल बलाहका आपतकालीन प्रमुख अबु याजन स्माइलका अनुसार यसको मूल कारण विस्थापितको सङ्ख्या थेग्नै नसक्ने हुनु पनि हो । यसरी विस्थापितले पानीको अभाव भएपछि आकाशे पानीलाई आफ्नै ढङ्गले पाइपको प्रयोग गरेर उपयोग गर्न सुरु गरेका छन् ।

प्याक फर पिस अर्गनाइजेसनका प्रमुख विम जियाङवर्गका अनुसार खेर गएको पानी धेरै नै भीड भएको स्थानबाट समुद्रतर्फ गइसकेको छ । यसरी गएको पानीका कारण समुद्र सतहमा समेत असर पर्न थालेको छ ।

अगस्ट २ मा स्याटलाइटबाट दुई वर्ग किलोमिटरको दृश्य लिइएको थियो । सो दृश्य हेर्दा जुन महिनादेखि समस्या बढेको थियो । सो समस्या विस्तारै बढ्दै गएको हो । तटीय क्षेत्रमा पछिल्लो समय कसरी भीड बढीरहेको छ भन्ने विषय चाहिँ त्यो स्याटलाइट दृश्यबाट देखाइएको छैन । जुन महिना संयुक्त राष्ट्र सङ्घको वातावरण प्रतिवेदन अनुसार इजरायलले गरेको आक्रमणका कारण खेर गएको पानीको व्यवस्थापन गर्ने संरचना नास भएका छन् ।

कोगाटमा रहेको इजरायली रक्षा मन्त्रालयको निकाय कोगाटले पनि यसलाई हेरिरहेको छ । साथै गम्भीरतापूर्वक लिइरहेको जनाएको छ । कोगाटले पछिल्लो महिना पानीको इनार र डिस्यालिनेसनको काम गरिरहेको छ । गाजाँको फोहोर व्यवस्थापनको वास्तविक अवस्था धेरैलाई थाहा छैन । तथापि अत्यन्त खराब रहेको भने सबैलाई थाहा छ । इजिप्टले इजरायली सेनाको साथमा स्वतन्त्र सञ्चार माध्यमलाई पनि त्यस क्षेत्रमा प्रवेश गर्न रोक लगाएको छ ।

गाजामा २५ वर्षमा पहिलो पटक पोलियो रोग देखा परेको छ । सो रोगका कारण एक १० वर्षीय बालकलाई पोलियो भएको छ । संयुक्त राष्ट्र सङ्घ र विश्व स्वास्थ्य सङ्गठनले पनि अहिले कमसेकम दुई पटक एक साताका लागि युद्ध विरामको प्रस्ताव अघि सारेका छन् । त्यसो भएमा ६ लाख जनालाई भ्याक्सिन लगाउन सकिने छ ।

त्यहाँको अवस्थालाई हेर्नेहरूले नियमित र व्यवस्थित रूपमा सहयोग र अन्य आवश्यक कुरा लैजान कठिन भए पनि भ्याक्सिनका कारण धेरै हदसम्म समस्याको न्यूनीकरण गर्ने कुरामा सहमत छन् । तर ध्वस्त भएको गाजाको स्वास्थ्य संरचनाले भ्याक्सिनेसन कार्यक्रमलाई अझ चुनौतीपूर्ण बनाएको छ ।

कोगाटले भने त्यस क्षेत्रमा स्वास्थ्य सहयोगमा कुनै अवरोध नभएको जनाएको छ। कोगाटले त्यस क्षेत्रमा ६० हजारलाई भ्याक्सिनको व्यवस्था गर्ने जनाएको छ । त्यहाँ १० लाखलाई भ्याक्सिनको आवश्यकता हुनसक्छ । अक्सफाम च्यारिटीले खराब पानीका कारण गाजामा अहिले नै एक चौथाई बिरामी भइसकेको जनाएको छ । अक्सफामका पानी तथा फोहोर व्यवस्थापन विशेषज्ञ लामा अब्दुल समाद अवस्था धेरै नै खराब भइसकेको बताउँछन् । उनकै अवस्था अझ धेरै भयावह अवस्थाको सङ्घारमा त्यो क्षेत्र छ । पोलियो मानिसमा जन्मने रोग हो । फोहोर व्यवस्थापनसँगको यसको प्रत्यक्ष सम्बन्ध छ । फोहोर व्यवस्थापन संरचना नासिएपछि बाटोमा नै ढल जमिरहेको दृश्य छरपस्ट देखिन्छ । अहिले गाँजा दुर्गन्धित भएको छ ।

स्याटलाइटबाट लिइएको फोटोले पनि गाजाको अवस्था एकदमै खराब भइसकेको चित्रित गर्छ । आफैले सफा पानीको व्यवस्थापन गर्ने गाजाका सेख सदवान लागोन समेत अहिले फोहोर पानीको समस्यामा परेका छन् । उनको अवस्था नै खराब भएको डा. सामद बताउँछिन् । दुरावस्थाको भिडियो सार्वजनिक भएका छन् । यसमा कसैको चासो नै नभएको होइन । तथापि दीर्घकालीन समाधानको बाटोमा अघि बढ्न कोही तयार छैनन् ।

चार दिन अघि संयुक्त राष्ट्रिय सङ्घीय सुरक्षा परिषद्ले गाजामा युद्ध विरामको प्रयास सुरु गरेको थियो । 'अहिले हामीलाई युद्ध विराम चाहिएको छ,' मध्यपूर्व शान्ति प्रक्रियाका संयोजक टर विन्सल्यान्डले भने । उनले अहिले हरेक व्यक्ति र समुदाय गाजाको युद्ध विरामका लागि सक्रिय हुनुपर्नेमा समेत जोड दिए । दुई लाख भन्दा बढी व्यक्ति आफ्नो वासस्थानबाट बाहिरिनु दृश्य दुखद भएको उनले बताएका छन् । उनले त्यहाँको 'ग्राउन्ड अवस्था' सहयोगका लागि एकदमै प्रतिकुल रहेको बताउँदै ध्वस्त भएको संरचना पुन तयार हुनका लागि दशक होइन शताब्दी समेत लाग्न सक्ने कुरामा जोड दिए ।

अहिले युद्ध विरामको प्रयास भइरहेको समयमा थप निराशा पैदा भएको छ । अहिले अमेरिकी प्रतिनिधिमण्डल इजिप्टको कायरोमा रहेर यसको तयारी गरिरहेको छ । अमेरिकी प्रस्तावलाई हमासले अस्वीकार गरीसकेको छ । प्रक्रिया अघि बढाउन अमेरिकी र इजिप्टका अधिकारीले इजरायली अधिकारीसँग भेट गरेका छन् । यस साताको अन्त्यसम्ममा निष्कर्षमा पुग्ने अपेक्षा उनीहरूको छ । कतार र इजिप्टका अधिकारीले हमासका वरिष्ठ अधिकारीसँग भेट गरिसकेका छन् । त्यो घटना र वार्ताका मुद्दाका सबै विषय बाहिर आएका छन् । तर फिलाडेल्फी कोरिडोको विषयमा अहिले वार्ताको केन्द्र बनेको छ । त्यहाँबाट इजरायल फिर्ता पठाउने विषयमा नै सहमति हुन सकेको छैन ।

धेरै समीक्षकको मतमा गाजामा युद्ध रोकिन कठिनाइ छन् । यसका बाबजुद अहिलेका लागि युद्ध विरामको पक्षमा भने इजरायल छ । इजरायलले ६ साता युद्ध विराममा आफू सहमत हुने जनाएको छ । इजरायलका नेता बेन्जामिन नेतान्याहुले युद्ध विरामको पक्षमा रहे पनि हमासलाई सखाप पार्ने प्रतिबद्धतामा आफू अडिग रहेको बताइसकेका छन् ।

१० महिनाको यो युद्धले धेरै क्षति व्यहोरेको छ। अहिले इजरायलका लागि हमास मात्र होइन, हिजबुल्लाह समेत थपिएको छ। यसले त्यस क्षेत्रमा थप क्षति पुग्ने छ। भत्किएको भौतिक संरचना तथा बाल बालिकाको असुरक्षित जीवन भने सबै भन्दा चासो र चिन्ताको विषय बन्न थालेको छ । स्रोतः बिबिसी, सिएनएन वेब रिलिफ

# मगर जनजीवन, "घरज्वाईं" फिलिम र सांस्कृतिक वैभव

कुब्जोङ किरात

दसवर्षे जनयुद्धको उद्गम थलो रोल्पा र रुकुम भनेर सबैलाई थाहा भएकै कुरो हो । 'घरज्वाईं' फिलिममा दसवर्षे जनयुद्धको अघि, जनयुद्ध काल र त्यसपछिको समयको सेरोफेरोमा रहेर टकसेरालाई क्यामरामा उनिएको छ । तर कस्तो भने फिलिमका कुनै पात्र आधुनिक विकाससँग सम्बन्ध राख्दैनन् । यहाँ मोटर बाटो पुगेको छैन । 'घरज्वाईं' फिलिममा माओवादीले टकसेरावासी समाजको परम्परा लयमाथि हस्तक्षेप गरेको छैन । स्विकारेकै देखिन्छ । लेखक बमकुमार बुढामगरको तर्कमा नालापानी युद्ध, नेपाल एकीकरण र माओवादी युद्ध वास्तवमा मगर जातिको सैन्य संस्कृतिमा निर्भर रह्यो ।

हजारौं वर्ष पुरानो गाउँ हो, टकसेरा । उत्तर बहने उत्तरगंगा छेवैमा सेरा गाउँ छ । उत्तरगंगा सानीभेरीमा मिसिन्छ । टक गाउँ छुट्टै छ । चारवटा गाउँहरू मिलाएर टकसेरा भनिन्छ । यही गाउँमा जन्मी हुर्केका अनिल बुढामगरले निर्देशक गरेको 'घरज्वाईं' फिलिममा तत्कालीन सामाजिक यथार्थलाई जेजसरी पर्दामा पस्केका छन्, सशस्त्र द्वन्द्वकालपछि सिनारियो फेरिएको छ ।

गत साउन तेस्रो दिन 'घरज्वाईं' फिलिम हेरेपछि त्यसमा समेटिएका घटनाहरूको रिल यो दिमागमा घुमिरह्यो । ओहो, यो त एउटा फिलिम होइन रहेछ । आदिवासी मगर समुदायको कथा रहेछ भन्ने लाग्यो । ह्याङ निक्लिनै सकेन । के गरौं । के भनौं । कसरी पो लेखेर यो भडास पोखौं भन्ने लागिरह्यो । आफू नपुगेको रुकुमको तकसेरामा बसोबास गर्ने मगर समुदायको कथा उनिएको रहेछ । कस्तो अनौठो संस्कार परम्परा रहेछ । घरज्वाईं बस्ने, नबस्ने कुरा पनि अचम्मकै हुने रहेछ ।

सोरोले बिन्जुरीलाई भगाएर घर भित्र्याएको क्षण अति मन पर्‍यो । रमरम बैंसकी सुन्दरी बिन्जुरी केन्द्रमा छ । घरिक घरज्वाईं बस्न मन्जुर तन्नेरी सोरोको याद आउँछ । बिन्जुरीको बाबु सुरजितको त्यो अरमठ्ठे स्वभावप्रति आक्रोश जाग्छ । हुन पनि यतिसाह्रो कडा स्वभावमा प्रस्तुत हुन्छन् कि सोरोले हलो जोत्न नजान्दा घरज्वाईं बस्न मन्जुर सोरोलाई दिनसम्म सजाय दिन्छ । एक्लै भए त ठिकै थियो नि चैते लाहुरेको लैलैमा किन लाग्नुपर्‍यो गाँठे ! त्यो चैतेले रम ख्वायो भन्दैमा उसैलाई छोरी दिनुपर्ने भित्री इच्छाले छोरी भगाएर लगिसकेका सोरोलाई पेल्ने पर्छ । आब्बुइ यस्तो मूर्खतालले हुँदैन नि हौ । जिन्दगीमा एकचोटि त बिहे गर्ने हो नि ! नभगाउनु सोरोले भगाएर बिन्जुलीलाई घर भित्र्याइसकेपछि छोरीले राजी नै हो भनिसकेपछि यस्तरी बहकिनु हुन्थ्यो नि सुरजित बुढो । हुनु ता आफूले जन्माए, हुर्काएको एक्लो सन्तान हो ! त्यत्ति राम्री बिन्जुरीलाई आँखा लाउने अधिकार चैते लाहुरेको पनि थियो । तर सोरोले भगाएर बिन्जुरीलाई आफ्नो बनाइसकेपछि पनि चैतेको हक त गुमिसकेको थियो । तैपनि उसले बिन्जुरीको बाउलाई रम ख्वाएर सोरोमाथि भिलेनगिरी खेल्न साह्रै नहुने काम हो । धन्नधन्न माओवादीले पनि समाजिक परम्परा नै सबैथोक हो भन्यो । माओवादीले छोरी राजीखुसी छ भनेर पत्तो पाउँछ र बाबुलाई भनिदिन्छ- भगाएर बिहे गरेकी छोरी राजी छिन् । जबरजस्त खोसेर केही फाइदा छैन । कमरेडहरू भन्छन्- 'हाम्रो पार्टीको कुरा चल्दैन, केटीको बाउको कुरा चल्छ ।' त्यसपछि बिन्जुरीको बाबुलाई पनि छोरीको इच्छा सर्वोपरि हो भन्ने बुझ्छ ।

तैपनि सुरजित बुढो कडै हो है । तकसेरा गाउँको मगरहरूमध्ये एउटा उधुमै मच्चाउन सक्ने बुढो हो, जसले छोरीको भविष्य उज्यालो पार्न अन्ततः चैते र सोरोलाई बँदेल हान्न लगाउँछन् । जसले बँदेल हान्छ उही घरज्वाईं बस्न पाउँछ । कहिल्यै बन्दुक नछोएका सोरोको हातको बन्दुक आफैंले खोसेर बँदेल भिरिप पारेपछि सुरजित बुढाको मानवताको पाना उघ्रिनु सुखद् सन्देश हो ।

उही कथा फेरि दोहोऱ्याउँछु । सोरोले बिन्जुरीलाई भगाएर घर भित्राएपछि समाजमा नयाँ द्वन्द्व सिर्जना हुन्छ । त्यसो नहुनुपर्ने हो । तर सुन्दर रूपकी धनी बिन्जुरीलाई त्यो चैते लाहुरेले आफ्नो बनाउन खोज्दै गर्दा सोरोले भगाएपछि परिस्थितिले अर्को मोड लिनपुग्छ । बिन्जुरीका बाबुलाई पनि त्यो पढेलेखेका मास्टरभन्दा त लाहुरेलाई नै छोरीको बिहे गरिदिन पाए उधुमै हुने भित्री चाहना थियो । सानैमा आमा गुमाएकी बिन्जुरीलाई बाबुले कष्टसाथ हुर्काएकै हुन् । मगरको सामाजिक परम्पराका कट्टर हिमायती बाबुको मनोदशा बुझिन्छ कि लाहुरे भनेका पैसाका पोका हुन् । सजिलै स्वास्नी जाहान परिवार पाल्छन् । तर मास्टर भनेका चानचुने हुन् । समाज यसरी बोल्छ ।

यो कथा हो, मगर जातिको अब्बल भूमि रुकुम टकसेरा गाउँको । हिमाली भूमि जहाँ हिउँदभरि हिउँले ढाकिन्छ, डाँडाकाँडे । अहिले नेपालका फिल्म हलहरूमा चलिरहेको फिल्म 'घरज्वाईं'को कथा हो यो । फिल्म संयोगान्त छ । अन्ततः सोरो र बिन्जुरीले घरजम गर्छन् । छोरीसमेत जन्माइसकेका हुन्छ । यो कथाले टकसेरामा रहेका खाम/पाङ मातृभाषी मगर जातिको परम्परालाई उजागर गरेको छ । बालक जन्मेसँगै मामाकी छोरीको हकदार बन्छ । उता मामाकी छोरी हुर्किन नपाउँदै फुपूको छोरासँग जोडी बन्ने सामाजिक परम्परागतले बाँधिएकी हुन्छ । तर त्यो बालक जसले मामाकी छोरीसितै बिहे गर्न नरुचाउन पनि सक्छ । अर्कै केटी मनपरेर बिहे गर्न सक्छ । तर, बिहे गर्नुअघि मामाकी छोरीबाट त्यो चिनो फिर्ता लिएको हुनुपर्छ । नत्र सांस्कृतिक/प्रथाजनित कानुनको उल्लंघन हुनसक्छ ।

'घरज्वाईं' चलचित्रका प्रमुख पात्र सोरो (नायक दयाहाङ राई)को परिवेश उधिन्नेतर्फ उन्मुख गराउँछ । सोरो माओवादीको दसवर्षे सशस्त्र जनयुद्धको बेला बाबु-आमाले सहरमा शिक्षा आर्जन गर्न पठाएको पात्र हुन् । उच्चशिक्षा आर्जन गरिसक्दा यता सशस्त्र जनयुद्ध सकिन्छ । सोरो एक दिन गाउँ फर्किन्छ । उनलाई स्थानीय रहनसहन, दैनिकी, ज्ञान, सीपबाट विमुख छन् । उच्चशिक्षा हासिल गरेर फर्किएकाले गाउँको विद्यालयमा मास्टर नियुक्त गरिन्छ । विद्यालय व्यवस्थापन समितिको अध्यक्ष उही बिन्जुरीकी बाबु हुन्छन् । तिनै मास्टरले आफ्नो छोरी भगाएपछि परिस्थिति जोखिमतर्फ मोडिन्छ । मगर जातिमा शताब्दीऔंदेखि चल्दै आएका ऋतुकालीन चाडवाडहरू छन् । त्यसैमा समाहित जनजीवनका कथाव्यथाहरू छन् । गाउँमा सशस्त्र क्रान्तिबाट शान्तिपूर्ण राजनीतिमा उत्रिसकेको माओवादी कार्यकर्ताले सामाजिक परम्परामा खासै भाँजो हालेका छैनन् । बरु परम्पराको निरन्तरता र मानव अधिकारको रक्षामा जुटेको भान हुन्छ ।

रुकुमको टकसेरामै जन्मे हुर्केका अनिल बुढामगर 'घरज्वाईं' फिलिमका निर्माण निर्देशक हुन् । उनले यो फिलिममा दसवर्षे जनयुद्धको अघि, जनयुद्ध काल र त्यसपछिको समयको सेरोफेरोमा रहेर टकसेरालाई क्यामरामा उनेका छन् । तर कस्तो भने फिलिमका कुनै पात्र आधुनिक विकाससँग सम्बन्ध राख्दैनन् । यहाँ मोटर बाटो पुगेको छैन । कसैको हातमा मोबाइल परेको छैन । बिजुली बत्तीको छायासम्म छैन । टुकी बलिरहेको छ । लाल्टिन बालेर रोडी अर्थात् थकानमा सहभागी हुन पुग्छन् । सहरबाट फर्किएका सोरा भने कुना फर्किएर सेन्ट (पर्फ्युम) काखीमा छर्केको देखिन्छ । सायद बिन्जुरी (नायिका मिरुना मगर)लाई आफूतिर आकर्षित तुल्याउने मनोकला भनेर बुझ्नु पर्ने देखिन्छ । माथि भनिसकियो कि चैते लाहुरेले रमको करामत पनि देखाएका छन् ।

फिलिम हेरेर फर्केदेखि मनमा अनेकन काउकुती चलिरहेको छ । अनि मैले मगर जातिबारे केही पुस्तक पल्टाउन थालें । आँखा पुग्यो- 'मगर जाति : ऐतिहासिक, राजनीतिक र सांस्कृतिक सन्दर्भ ।' यसभित्र 'मगरातको इतिहासमा काला र गोरा शेषको आधार' शीर्षकमा लेखक बमकुमारी बुढामगरले लेखेका छन्, 'दस वर्षको युद्ध (२०५२-२०६२)को सहभागिता मगर संस्कृतिमा आधारित थियो । अधिकांश मगर लडाकु सहभागी हुनुमा पारिवारिक वातावरण नै कारक थियो । नालापानी युद्ध, नेपाल एकीकरण र माओवादी युद्ध वास्तवमा मगर जातिको सैन्य संस्कृतिमा निर्भर रह्यो (बमकुमारी बुढामगर, मगर जाति : ऐतिहासिक, राजनीतिक र सांस्कृतिक सन्दर्भ, २०७१:९२)।'

यत्ति कुराले साह्रै दिमाग खाइरहेको छ । दसवर्षे जनयुद्धको उद्गम थलो रोल्पा र रुकुम भनेर सबैलाई थाहा भएकै कुरो हो । 'घरज्वाईं' फिलिममा माओवादीले टकसेरावासी समाजको परम्परा लयमाथि हस्तक्षेप गरेको छैन । स्विकारेकै देखिन्छ । किताबमा बमकुमारी बुढामगरले माथिका पंक्ति लेखिभ्याएकी छिन् । अन्ततः उही लेखक बमकुमार बुढामगरलाई सोधें । 'मगर जाति आफैंमा सीप कला भएको समुदाय हो । सैन्य त हाम्रो नाचोमा छ । खेलमा छ । बन्दुक बनाउँथ्यो । बारुद बनाउँथ्यो । दस वर्ष जनयुद्धले पो त्यसलाई बढाउँदै लग्यो । बन्दुक बनाउने अनि गौडामा नम्बर हान्ने प्रशासकीय जिल्ला थियो नि पहिला । हँसिया नाम्लोजस्तै आफैं बनायो । आफैं कमायो । राणाकालमा नम्बर लगाउने, लाइसेन्स व्यवस्था गरेपछि गौडा जिल्लामा आधिकारिकता पाएको व्यक्तिको तर्फबाट नम्बर हान्ने गरिन्थ्यो, लाइसेन्स लिनलाई । सैन्य नाचो लट्ठी जुझाएर प्रदर्शन गरिन्छ । अहिले काठमाडौंमा प्रस्तुत गराइरहेको छ । मैले आफ्नो विचारबाट भनेको हो । मूर्त र अमूर्त संस्कृति दुइटैलाई आधार बनाएर नै युद्ध सफल भएको हो भन्दै आएको छु । मैले अनुकूल समयमा बोल्दै आएको छु । पछिल्लो माओवादी युद्धदेखि नालापानीको युद्धसम्मले मगर संस्कृतिलाई आधार मानेको छ । रोल्पा, रुकुम, सल्यान, जाजरकोटको संस्कृति एउटै हो । अठार मगरात, बाह्र मगरात सुन्नु भएकै होला । पछिल्ला वार्ताका चरणहरूमा विदेशी पत्रकारसमेतले अठार, बाह्रका कुरा उठाएका छन् । युद्धमा सामेल भएकाहरूले आफ्नो विचार दिइरहेका छन्, फुटका निम्ति । हामी मगरको उद्गम थलोका रूपमा रुकुम मान्दैआएका छौं । मगर मुकामकोटको योमाखार, पेल्माखार भन्ने ओढारबाट विकास भएको भन्ने हाम्रो मिथक छ । पृथ्वीनारायण शाहले काला पल्टन र गोरा पल्टन भनेर मगरको दुइटा पल्टन राखेको थियो । किरातीहरूलाई दबाउने, नेवारहरूलाई दबाउने योजनाअनुसार मगरको छुट्टै पल्टन राखेको थियो । कालाबार भनेको नदीभन्दा पूर्व नेपालको भूमि कालाबार भनिथ्यो । काला भनेको अठारपन्थी बुढा, घर्ती, पुन, रोका यिनीहरूको बस्तीलाई कालाबार भन्छ । गण्डकीको रिडीदेखि महाकालीसम्मको भूमिलाई काला भनेर चिनिन्थ्यो । त्यसमा अठार राज्य थिए । अठार राज्यलाई मास्न हामीलाई नै खेताला बनाएका थिए । पहिला संघात्मक अठार र बाह्र मगरातलाई एकात्मक बनायो । फेरि त्यसलाई एकात्मकलाई संघात्मक बनाउन त्यहाँको भूमि छान्यो । रोल्पा कालासेट र गोर्खा गोरासेट भन्ने ऐतिहासिक कुरा हो । मैले जीवनमा समाजलाई हेर्दाखेरि देखेको यिनै कुरा हुन् (२०८१ भदौ ९ गते गरिएको कुराकानी)।'

अध्यता सञ्जोल लाफामगरका अनुसार मगर जातिमा लडाकु संस्कृति रहेको छ । त्यसैलाई आधार मानेर बमकुमारी बुढामगरले युद्धकलामा आधारित नृत्य, तरवार घुमाउने नृत्य, लट्ठी घुमाउने नृत्य कलामा आधारमा उल्लेख गरेको ठान्छन् ।

निर्देशक अनिल बुढामगरले तत्कालीन सामाजिक यथार्थलाई जेजसरी पर्दामा पस्केका छन्, सशस्त्र द्वन्द्वकालपछि सिनारियो फेरिएको छ । 'घरज्वाईं' फिलिम एकातिर समाज अर्कोतिर हुँदै गएको स्थिति छ । 'जनयुद्ध चर्किंदै गएपछि तकसेरालगायत मगरात क्षेत्रको मौलिक संस्कृतितामाथि हस्तक्षेप बढ्न गयो । आफ्नोपन त्याग्दै गए । जनयुद्धकालमा ३-४ घरमात्र माओवादी थिए । शान्ति प्रक्रियामा आएपछि माओवादीको संख्या ह्वात्तै बढ्यो । तर युद्धकालमै सहर छिरेका रुकुम, रोल्पा क्षेत्रका युवाहरू गाउँ फर्किन सकेनन् । अवैध बाटो भएर अमेरिका छिर्नमा टकसेराकै धेरै छन् । मेरा समकाली अधिकांश विदेश छिरेका छन् । नजाने त मैमात्र हो ।' अनिलको कथन छ । बजारिया फिलिमभन्दा इतिहास बोल्ने फिलिम बनाउन सकेकामा अनिल गर्व गर्छन् । असार २८ गतेदेखि फिलिम हलहरूमा 'घरज्वाईं' निरन्तर सातौं हप्तासम्म चलिरहनु यसको मौलिकताको कसी नै हो ।

हजारौं वर्ष पुरानो गाउँ हो, टकसेरा । उत्तर बहने उत्तरगंगा छेवैमा सेरा गाउँ छ । उत्तरगंगा सानीभेरीमा मिसिन्छ । टक गाउँ छुट्टै छ । चारवटा गाउँहरू मिलेर टकसेरा भन्न गरिन्छ । नेपालको झाँकी नै झाँकीको गाउँ पनि भनिएको छ । मौलिकताले भरिपूर्ण टकसेरा गाउँ हो । ढुँगैढुंगाले बनेका घरहरू छन्, ढुंगाकै छाना लगाइएका छन् । बाटोघाटोमा ढुंगा बिछ्याइएका छन् । गल्ली दायाँ-बायाँ ढुंगाकै पर्खाल लगाइएका छन् । साढे तीनसय घर त मगर जातिको मात्र छन् । केही घर दलितका छन् । स्थलगत यात्रा गरेर टकसेरा पुग्नै निक्कै टाढा छ । स्वदेश या विदेश बसेर अहिले यो गाउँको मौलिकपन हेर्न सकिने 'घरज्वाईं' फिलिममै हो । तर यो फिलिममा बिहे र मृत्युपछिको संस्कारमात्र समेटिएको छ । आमा गर्भिणी भएपछि केकस्ता संकार गरिन्छ । बच्चा जन्मिदा कसरी न्वारन, पास्नी, छेवर, गुन्युचोली गरिन्छ । त्यतिमात्र समेटिएको भए, मानव निर्मित जीवनचक्र पूरा हुन्थ्यो भन्ने लाग्छ । इन्डिजियस भ्वाइस

# छोरालाई राजनीतिमा ल्याउन कानुन संशोधनको प्रयास

एजेन्सी । केही समय पहिले बंगलादेशमा भड्को आन्दोलनका कारण त्यहाँको प्रधानमन्त्री देश छोडेर भारत निर्वासनमा जानु परेको घटना सेलाउन नपाउँदै फेरी अर्को इस्लामिक देश इण्डोनेसियामा पनि त्यस्तै खालको आन्दोलन शुरु भएको छ । बंगलादेशमा तत्कालीन प्रधानमन्त्री शेख हसिनाले एकातिर चीन र अर्कोतर्फ भारतलाई साथ दिँदै देशको आर्थिक विकासका लागि अर्बौ खर्ब डलरको कोष ल्याएको थियो । तर, भित्रभित्रै उनको देशमा उनको विरुद्धमा आगो बलिरहेको थियो वा सल्किरहेको थियो । तर, त्यो धुवाँ प्रधानमन्त्रीले बुझ्न सकेनन् । त्यसपछि अचानक देशमा उनको विरुद्ध विद्रोह भयो र उनले आफ्नो ज्यान बचाउन भारतमा शरण लिनुपऱ्यो । त्यहाँ भएको हिंसामा झण्डै एक हजार मानिस मारिएका थिए । विगत तीन साताँदेखि यो देशको हरेक व्यवस्था भत्किएको छ । अल्पसंख्यक हिन्दूहरूमाथि पनि यहाँ धेरै आक्रमणहरू भएका छन् । सिंगो देश अराजकतावादी तत्वहरूको हातमा पुगेको छ ।

बंगलादेशकै बाटोमा अर्को मुस्लिम देशले पनि पछिल्ला केही वर्षमा निकै तीव्र गतिमा आर्थिक प्रगति गरिरहेको छ । आफ्नो देशमा कीर्तिमानी समयमा बुलेट ट्रेन सुरु गरेको तथ्यबाट यसको आर्थिक प्रगति बुझ्न सकिन्छ । यसले आधुनिक राजधानी निर्माण गरिरहेको छ । जसमा अर्बौं रुपैयाँ खर्च हुनेछ । यो आधुनिक राजधानीले विश्वको सबैभन्दा विकसित सहर मध्येको एक लण्डनलाई समेत हराउन सक्ने बताइएको छ ।

त्यो देश इन्डोनेसियाहो । इन्डोनेसिया विश्वको सबैभन्दा ठूलो इस्लामिक राष्ट्र हो । यहाँको जनसंख्या लगभग २८ करोड छ । यो देश सयौं टापुहरूको देश हो । यहाँका केही क्षेत्रमा हिन्दू समुदायको जनसङ्ख्या पनि राम्रो छ । तर, यो देश केही समयदेखि नागरिक आन्दोलनको सिकार पनि भएको छ ।

वास्तवमा, यो सम्पूर्ण हंगामा इन्डोनेसियाका वर्तमान राष्ट्रपति जोको विडोडो र उनका छोरासँग सम्बन्धित छ । उनको सरकार संसदबाटै मुलुकको जनप्रतिनिधित्व ऐन संशोधन गर्न चाहन्छ । त्यहाँ चुनाव लड्न न्यूनतम उमेर ३० वर्ष तोकिएको छ । अर्कोतर्फ राष्ट्रपति जोको विडोडो आफ्नो छोरालाई राजनीतिमा ल्याउन चाहन्छन् । उनी चुनाव लड्न चाहन्छन् । तर, उनको उमेर अझै २९ वर्ष छ । यस्तो अवस्थामा उनी संसदमार्फत जनप्रतिनिधित्व ऐन संशोधन गर्न चाहन्छन् । उनको प्रस्तावलाई त्यहाँको न्यायपालिकाले अस्वीकार गरेको छ ।

सरकारको यस्तो कदमको विरोधमा केही समयदेखि जनता सडकमा उत्रिएका छन् । यहाँ चर्को विरोध भइरहेको छ । प्रदर्शनकारीले संसदको ढोका तोडेर प्रवेश गरेका थिए । उनीहरुले अन्य धेरै महत्वपूर्ण स्थानहरुमा तोडफोड गरेका छन् । जनताले सरकारलाई हामी लोकतान्त्रिक देश हो भनेर प्रश्न गरिरहेका छन् । यस्तो अवस्थामा आफ्नो इच्छा अनुसार काम गर्न सकिँदैन । तर, अहिले ती आन्दोलनप्रति सरकार झुकेको छ । उनले यस विधेयकमाथिको छलफल अर्को अधिवेशनसम्मका लागि स्थगित गरेका छन् ।

तर, राष्ट्रपति जोको विडोडो र उनको सरकारविरुद्धको यो विरोधको आवाजलाई अन्य मुद्दाहरूमा पनि मोड्न सकिन्छ । यसमा सबैभन्दा ठूलो मुद्दा नयाँ राजधानीको विवाद हो । जोको विडोडोले आफ्नो १० वर्षे शासनकालमा यो राजधानी निर्माण सम्पन्न गर्ने योजना बनाएका थिए । तर उनको शासन यसै वर्ष सकिँदै छ तर नयाँ राजधानी निर्माणको काम भने अधुरो छ । यो पुँजीका लागि स्थानीय जनताबाट ठूलो मात्रामा जग्गा लिइए पनि उचित मुआब्जा पाएका छैनन् । यसप्रति पनि जनतामा राष्ट्रपतिप्रति असन्तुष्टि छ ।

# विनायकद्वारा घिन्ताङ घिसी नाच प्रदर्शन



मध्यपुर थिमि । हाम्रो संस्कृति हाम्रो पहिचान, हाम्रो गौरव र हाम्रो चिनारी : संस्कृतिको सम्मान, हाम्रो अभियान भन्ने नारालाई सार्थक पार्न र शिक्षा, संस्कृति र संस्कारको त्रिवेणीको रुपमा रहेको विनायक शिक्षा निकेतन इङ्लिस स्कुलले भाद्र ९ गते घिन्ताङ घिसी नृत्य प्रदर्शन कार्यक्रमको आयोजना गरेको थियो । स्थानीय पाठ्यक्रमको उद्देश्य अनुसार विद्यार्थीहरूमा सांस्कृतिक रूपान्तरण तथा चेतना जागृत गर्न र हरेक संस्कृतिहरुलाई समावेशी संस्कृतिका रूपमा संरक्षण तथा प्रवर्द्धन गर्ने उद्देश्यले सो कार्यक्रमको आयोजना गरिएको विद्यालयका सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाले जानकारी गराएका छन् । विशेष गरेर सापारु पर्वको सेरोफेरोमा नेवारी समुदायमा अत्यन्तै लोकप्रिय नृत्यका रुपमा प्रदर्शन गर्दै र मनाउँदै आएको परम्परागत संस्कृतिक नृत्य घिन्ताङ घिसी जसलाई लट्ठी डान्सको रुपमा पनि चिनिन्छ, विद्यार्थीहरुले विद्यालय परिसरबाट नाच्दै बालकुमारी मन्दिर सम्म र पुनः त्यहाँबाट बाहखा बजार परिक्रमा गरी विद्यालय परिसरमै समापन गरिएको थियो । कक्षा ६ देखि १० सम्मका करिब ३०० जना विद्यार्थी र शिक्षक शिक्षिकाहरू सहभागी उक्त नृत्य प्रदर्शन कार्यक्रममा विद्यार्थीहरुले आ-आफ्नो संस्कृति झल्कने सांस्कृतिक पोशाकमा सहभागी भई घिन्ताङ घिसी नृत्य प्रदर्शन कार्यक्रमलाई भव्य रुपमा सफल बनाएका थिए । विनायक इन्टरयाक्ट क्लब र विनायक अतिरिक्त क्रियाकलाप शाखाको संयुक्त आयोजनामा प्रस्तुत गरिएको उक्त कार्यक्रममा विद्यार्थीहरुले हरेक जातजातिको संस्कृतिलाई संरक्षण र सम्मान गर्न समावेशी घिन्ताङ घिसी नृत्य प्रदर्शनमा सहभागी भएको बताएका थिए । समापन कार्यक्रममा बोल्दै विद्यालयका प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले विद्यार्थीहरुलाई संस्कृतिको चिनारी गराउँदै सांस्कृतिक महत्व झल्काउन र संस्कृतिप्रतिको प्रेमलाई अझ सशक्त बनाउँदै प्रगतिशील सोचको रुपान्तरित शिक्षा प्रदान गर्न यस्ता कार्यक्रमहरु आयोजना गरिएको बताए साथै सांस्कृतिक संरक्षण र प्रवर्द्धनमा विद्यालय स्थापनाकालदेखि नै लागिपरेको कुरा बताउँदै सबैलाई विशेष धन्यवाद ज्ञापन समेत गरेका थिए ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### सरकार निर्णय गर्दै जाने अदालत रोक्दै !

कुनै पनि राज्यमा सरकार आम जनमानसको सहजता र तिनको आर्थिक उन्नतिमा सहयोग गर्ने र नागरिकले राज्यबाट पाउने सेवा सुविधाहरु सहजताका साथ प्राप्त गर्न सक्ने गरी व्यवस्थापन गर्नु हो। तर नेपालमा सरकारका हरेक निर्णयहरु आज जनसमुदायको लागि असहजता र नागरिक अमैत्री हुने गरेको छ। देशमा नागरिकको लागि नागरिकता प्रमाण पत्र आवश्यक छ। यही परिचयपत्रको आधारमा राज्यले प्रदान गर्ने सेवा सुविधा र राज्यप्रति नागरिकको दायित्व बहन गर्नु पर्दछ। अहिले राज्यले नागरिकको परिचयको लागि दोहोरो परिचयपत्र लागू गर्ने निर्णय गरेको छ। तर सरकार राष्ट्रिय परिचयपत्र सबैले सजिलै पाउने सुनिश्चित चाहिँ नगर्ने तर राज्यबाट उपलब्ध हुने सेवाका लागि भने अनिवार्य गर्ने कार्य विवेकपूर्ण र न्यायोचित होइन्।

आम जनताको यही असहजताका कारण राष्ट्रिय परिचयपत्र अनिवार्य गर्ने निर्णय तत्काल कार्यान्वयन नगर्न सर्वोच्च अदालतले गत शुकवार अन्तरिम आदेश जारी गरेको छ। वितरण प्रक्रियामा सुधार नगरी परिचयपत्र अनिवार्य गरिँदा ज्येष्ठ नागरिकलगायत धेरैले सास्ती पाएका थिए। सरकारले सामाजिक सुरक्षा भत्तालगायत सार्वजनिक सेवा लिन राष्ट्रिय परिचयपत्र अनिवार्य हुने उर्दी जारी गरिदियो। अनि भत्ता नपाइने डरले धेरै ज्येष्ठ नागरिकहरू परिचयपत्र बनाउन गर्मीयाममा पनि घन्टौं लाममा लाग्न बाध्य बनेका थिए। तर अहिले अदालतबाट निर्णय तत्काल कार्यान्वयन नगर्न अन्तरिम आदेश जारी गरेको छ। जसको कारण परिचयपत्र बनाउने प्रक्रिया पूरा गर्न नभ्याएका लाखौं ज्येष्ठ नागरिकलगायत धेरैले सन्तोषको सास फेर्न पाएका छन् र सरकारी सुविधा लिन पाएको छ।

सरकारले यस्तो विवेकहीन निर्णय पहिले पनि गरेको थुप्रै उदाहरणहरु छन्। जसको आम जनताले खुल्ला रुपमा विरोध गर्ने गरेको छ। यही जनताकै विरोधका कारण संवैधानिक निकाय अदालतले बदर गरिदिने कार्य हुँदै आएको छ।

यस्ता सबै निर्णयहरू जनताको सुविधा र हितका लागि नभएर सरकारी संयन्त्रका कसैको सनकमा हुने गरेको देखिन्छ। सत्तामा पुगेपछि नेताहरुमा भलै ती जनताको मतबाट जितेका भएपनि पार्टी हित अनि व्यक्तिगत स्वार्थमा लिप्त हुने गरेको र जसको मतबाट उच्च पदमा पुगेका हुन तिनै जनताको स्वार्थलाई वेवास्ता गर्ने परिपाटी हावी बन्दै गइरहेको छ। जनतालाई मर्का पर्ने यस्ता निर्णय हुन नदिन कर्मचारी संयन्त्र र राजनीतिक नेतृत्वले परस्परमा नियन्त्रण र सन्तुलनकारी भूमिका निभाउन आवश्यक छ।

त्यसैले अहिले देशमा अर्को विद्रोहको संकेत पनि देखिएको छ। गत सोमवार टुंडिखेलमा आयोजित एक सांस्कृतिक कार्यक्रम जुन पश्चिम नेपालमा मनाइने गौरा पर्वको अवसरमा सम्बोधन गर्न पुगेका सरकार प्रमुख प्रधानमन्त्री ओली र सत्ता साझेदार नेपाली कांग्रेसका सभापति देउवा माथि युवाहरुको आक्रोसले राजनीतिक दल र तीनका नेताहरु प्रति आम जनताको वितृष्णा फैलिएको देखिएको छ। जसमा ती युवाहरुलाई प्रहरी परिचालन गरेर पक्राउ गरेको छ। जुन सरकारको अत्यन्तै गैर जिम्मेवारपन हो। विरोधको समाधान खोज्नु भन्दा दबाउने प्रवृतिले देशमा अराजकता फैलिदै जाने गर्दछ , जुन हालै छिमेकी मुलक बंगलादेशको घटनाले पनि देखाएको छ। विरोधको आवाज उठ्ने वितिकै विरोधीको विल्ला भिराउने कार्यका कारण आज बंगलादेशको अवस्था अराकता तर्फ उन्मुख छ।

ज्नताका मत प्राप्त गरेर आम जनताकै हितमा कार्य गर्ने प्रतिबद्धताका साथ सत्तामा पुगेका सबै राजनीतिक दलले जनताकै सेवा गरेमा नेपालले बंगलादेशको नियति भोग्न पर्दैन। साथै सत्ता र शक्ति सधैं प्राप्त पनि हुँदैन। आशा गरौं शासकहरू सुध्रिनेछन्। प्रधानमन्त्री खड्गप्रसाद ओलीले सरकारसँग आश पनि गर्नु भर पनि पर्नु जो भनेका छन्।

# कुहिरो भित्रको काग बन्दै विद्यार्थी आन्दोलन !

● तिर्सना हमाल

जब देशमा सङ्कट देखापर्छ, मानिसहरू विद्यार्थी आन्दोलनको आवश्यकता महसुस गर्छन् । हामीकहाँ विद्यार्थी आन्दोलनको इतिहास नै त्यस्तै छ । निरङ्कुश जहानियाँ राणाशासनविरुद्ध होस्, निर्दलीय पञ्चायती व्यवस्थाका विरुद्ध होस्, वा निरंङ्कुश राजतन्त्र हटाएर गणतन्त्र ल्याउने ०६२/६३ को जनआन्दोलन होस्– अग्रपंक्तिबाट आवाज उठाउनेहरु विद्यार्थी नै थिए ।

देशमा महँगी बढ्दा होस् या कुरीति, कुशासन वा भ्रष्टाचार मौलाउँदा होस्; त्यसविरुद्ध बोल्ने विद्यार्थी नै हुन्थे । त्यसैले विद्यार्थी आन्दोलन नेपालको राजनीतिक आन्दोलनको पर्याय बन्न गएको छ, तर पछिल्ला केही वर्षयता विद्यार्थी आन्दोलन कुहिरोभित्रको कागजस्तै भएको छ ।

सडकबाजका रूपमा देखापर्ने विद्यार्थी आन्दोलन साह्रै नमिठा आपसी कचिङ्गलमा रुमलिएको छ । विचारधारात्मक बहस छेड्ने तागतको कुरै छाडौं, वर्तमानमा विद्यार्थी संगठनहरूले न शैक्षिक सुधार वा रूपान्तरणका लागि आन्दोलनको उठान गर्न सकेका छन्, न त सामाजिक सुधारका एजेन्डामा आवाज उठाउन सकेका छन् । विद्यार्थी छन् तर विद्यार्थी आन्दोलन हराएको छ, विद्यार्थी संगठन छन् तर एजेन्डाविहीन भएर आन्तरिक अन्तर्कलहमा व्यस्त भएका छन् ।

वास्तवमा विद्यार्थी भनेका समाजको भविष्य र परिवर्तनका मुख्य चालक हुन् । सधैं अग्रगामी चेतना बोक्ने युवा विद्यार्थीहरू ज्ञानका भोका हुन्छन् । उनीहरू देश-समाजमा हुने कुनै पनि असामान्य गतिविधि तथा चित्त नबुझ्ने घटना वा कुरामा आफ्नो विचार व्यक्त गरिहाल्छन् । विद्यार्थी चेतना नयाँको खोजीका लागि सधैं लालायित हुन्छ । विद्यार्थी भनेको केवल पढ्ने-लेख्ने कार्यमा संलग्न भई औपचारिक संरचनाभित्रको व्यक्ति होइन, यो एउटा सोच हो । यो एक ऊर्जाशील चेतना हो ।

जुन किशोर वा युवामा नयाँ कुरा सिक्ने इच्छाशक्ति प्रबल छ; समाजमा देखिने अन्याय, अत्याचार, असमानताका विरुद्ध आवाज नउठाइरहन सक्दैन; जो सधैं परिवर्तनका पक्षमा उभिन्छ र नयाँ कार्यका लागि अग्रसर रहन्छ; उही विद्यार्थी कहलाउँछ । यही चेतना, सोच र प्रवृत्तिलाई संगठित रूप दिँदा त्यो विद्यार्थी आन्दोलन बन्छ । यसर्थ विद्यार्थी आन्दोलनमा जमेको पोखरीजस्तो होइन, तुफानी वेगमा बग्ने साउने भेलजस्तो चरित्र हुन्छ ।

जुन देश र समाजमा विद्यार्थी आन्दोलन सशक्त हुन्छ, त्यो देशमा राजनीतिक आन्दोलन पनि सही दिशामा हुन्छ । विद्यार्थी आन्दोलन कमजोर तथा सुषुप्त अवस्थामा भएका ठाउँमा राजनीतिक आन्दोलन पनि सशक्त हुँदैन । देशको समग्र व्यवस्था राजनीतिले निर्धारण गर्छ । राजनीतिक व्यवस्था सही हुन त्यो देशभित्रको राजनीतिक आन्दोलन मजबुत र सही दिशामा हुनुपर्छ । जब राजनीतिले बाटो बिराउँछ वा राजनीतिक आन्दोलन एजेन्डाविहीन बन्छ, त्यो देशको भविष्य सङ्कटमा पर्छ ।

वर्तमान नेपालको राजनीतिबारे कुरा गर्दा सामाजिक र राजनीतिक संगठनका बारेमा चर्चा गर्नैपर्छ । नेपाली समाजमा आज जुन प्रकारका राजनीतिक समस्या देखापरेका छन्, ती अन्ततः वैचारिक समस्या हुन् । यो आलेख विद्यार्थी आन्दोलन कुहिरोभित्रको काग हुनुका कारण खोतल्न केन्द्रित छ । त्यसका निम्न कारण प्रमुख छन् ।

एजेन्डा विहीनता

निरङ्कुश जहानियाँ राणाशासनविरुद्ध बोल्नु मृत्युदण्डको सामना गर्नु हुन्थ्यो, त्यस बेला अग्रगामी चेत भएका विद्यार्थीले भारतबाट आवाज उठाएका थिए । पञ्चायती व्यवस्थाका विरुद्ध पनि बोल्न सहज थिएन, यद्यपि ठाउँ ठाउँमा विद्यार्थीले आन्दोलन गरी दलहरुलाई आधार दिएका थिए । दशवर्षे जनयुद्ध र २०६२/०६३ को ऐतिहासिक जनआन्दोलनमा विद्यार्थी संगठनहरुले गणतन्त्र स्थापनाका लागि स्पष्ट वैचारिक एजेन्डा लिएर सडक तताएका थिए । नेपालको राजनीतिक इतिहासमा ऐतिहासिक कोसेढुंगा साबित यी चर्चित आन्दोलनमा मात्र होइन, त्यस अघि र पछि पनि नेपाली विद्यार्थी आन्दोलन स्पष्ट वैचारिक एजेन्डामा आधारित थियो ।

प्रमुख राजनीतिक दलहरूले आन्दोलनको उठान गर्न नसकिरहेका बेला समेत स्पष्ट वैचारिक मार्गमा विद्यार्थी अगाडि बढेका थिए । सत्य यो छ कि विद्यार्थी आन्दोलनले उठाएका एजेन्डा र आन्दोलन नै अन्ततः राजनीतिक दलले अपनाएर ऐतिहासिक राजनीतिक परिवर्तन भएका छन्, तर पछिल्लो समय विद्यार्थी आन्दोलन वैचारिक एजेन्डाविहीन भएको आभास हुन्छ ।

यतिखेर कुनै पनि विद्यार्थी संगठनले आफ्नो स्पष्ट वैचारिक दृष्टिकोण अगाडि सार्न सकेको देखिँदैन । मातृ पार्टीले सञ्चालन गरेको आन्दोलन वा कार्यक्रममा सहभागी हुनेबाहेक विद्यार्थी संगठनहरूले स्वतन्त्र आन्दोलनका कार्यक्रम विकास गरेको देखिँदैन । सामान्य समसामयिक विषयमा प्रतिक्रियात्मक टिप्पणी गर्नेबाहेक व्यवस्थित कार्यक्रम र कार्ययोजना विकास गर्नेतिर संगठनहरू लागेको पाइँदैन । यही नै विद्यार्थी संगठनहरूभित्रको वैचारिक समस्या हो ।

विद्यार्थी नेताहरू विचार दृष्टिकोणको बहसमा भन्दा विशुद्ध प्राविधिक विषयमा अलमलिएको प्रस्ट देखिन्छ । विद्यार्थी संगठनका मुद्दाहरू स्पष्ट नहुँदा उनीहरूको आन्दोलनलाई समर्थन गर्ने आधार कमजोर हुँदै गएको छ । विद्यार्थी आन्दोलनले विगतमा महत्त्वपूर्ण मुद्दाहरू उठाएका थिए, आजका दिनमा तिनको प्रभाव र धार हराएको देखिन्छ ।

वैचारिक बहसको अभाव

कुनै पनि राजनीतिक सङ्घ-संगठन वा दलको जीवन्तता र प्रभावकारिता त्यस संगठनले बोक्ने विचारले निर्धारण गर्छ । स्पष्ट वैचारिक कार्यदिशा तथा दृष्टिकोण नभएका राजनीतिक संगठनहरू मौसमी हुन्छन् । एउटा निश्चित समयमा खहरे भेलसरी उदाउँछन् र त्यसैगरी विलीन भएर जान्छन् ।

मानिसको चेतनालाई व्यवस्थित दिशानिर्देश गर्ने राजनीतिक विचारले नै हो । व्यक्तिले बोक्ने विचारले उसको सामाजिक अस्तित्व र यात्रा निर्धारण हुन्छ । त्यसैगरी कुनै पनि देशभित्रका राजनीतिक सङ्घ-संगठनहरूले बोक्ने विचारले नै त्यो देशको अस्तित्व र यात्रा निर्धारण हुन्छ । देशको नेतृत्व गर्ने राजनीतिक दल वा तिनका नेतामा वैचारिक स्पष्टता, त्यसप्रतिको दृढता र देश बदल्ने सपना जस्तो भयो, त्यही अनुसार त्यो देशको भविष्य तय हुन्छ ।

पछिल्लो समय समाजको वैचारिक धार क्रमशः मत्थर हुँदै गएको देखिन्छ । समाजमा जति बढी वैचारिक बहस, छलफल, अध्ययन तथा अन्तर्क्रिया हुन्छन्, त्यति नै देशले सही राजनीतिक नेतृत्व प्राप्त गर्छ । साथै सङ्घर्षको मैदानमा उत्रिने नेताहरूमा वैचारिक स्तर विकास र समृद्ध हुँदै जान्छ । राजनीतिक विचारहरू जति बढी सङ्घर्षको मैदानमा माझिन्छन्, त्यति प्रभावशाली हुन्छन्, तर हिजोआज जनसंगठनहरू वैचारिक बहसमा होइन, सामाजिक सञ्जालमा ओइरिने गाली, आवेग, प्रतिक्रियाभित्र सीमित हुने गरेका छन् । वास्तवमा समाजको वैचारिकी निरन्तर कमजोर हुँदै गएको भान हुन्छ ।

व्यक्तिगत कुण्ठा

हिजोआज विद्यार्थी संगठनमा मात्र होइन, प्रायः सबै जनसंगठनमा विचार दृष्टिकोणमाथि कम छलफल हुन्छन् । निर्धारित कार्य अवधिभर ती कमिटी सधैं आन्तरिक विवाद मिलाउन वा व्यक्ति-व्यक्तिको व्यवस्थापन गर्नेतिर बाहेक कतै पुगेको देखिँदैन । व्यक्तिगत कुण्ठामा राजनीतिक जनसंगठनहरूको सिङ्गो कार्यकाल बित्ने गरेको छ ।

प्रथमतः संगठनहरूमा साझा छलफल, बहस तथा अन्तर्क्रिया नभई कुनै निश्चित एक व्यक्तिको एकमनावाद लागु भएको देखिन्छ । त्यसो हुँदा त्यसभित्र रहेका नेता तथा सदस्यहरूका व्यक्तिगत स्वार्थ, समस्या, प्रवृत्ति तथा कुण्ठामा संगठन कैद हुन्छ । जब कुनै संगठनका सबै छलफल तथा बैठकहरू व्यक्तिका व्यवस्थापन तथा केही व्यक्तिबाट सिर्जित समस्यामाथि केन्द्रित हुन्छन्, तब त्यो संगठनको मात्र होइन, ऊसँग जोडिएको सिङ्गो समाजकै गति शून्य हुन जान्छ । यसले आन्दोलनको नैतिक आधारलाई कमजोर बनाएको छ ।

राजनीतिक प्रकृतिका संगठनहरू समेत विशुद्ध प्राविधिक समितिका रूपमा देखापरेको देखिन्छ । संगठनभित्र आन्तरिक गुटबन्दी र कलह बढ्दै गएको देखिन्छ । गुटबन्दी र आन्तरिक कलहकै कारण राजनीतिक संगठनहरूमा हुनुपर्ने असली एकता र तागत छैन । सामाजिक राजनीतिक परिवर्तनलाई आकार दिने शक्ति तथा संगठनहरू अहिले निष्प्रभावी भएका छन् ।

निरङ्कुशता जन्माउने आधार

हिजोआज कतिपयले नेपालमा लामो राजनीतिक अस्थिरता र अराजकताबाट वाक्क भएर कुनै निरङ्कुश शासक जन्मिदिए हुन्थ्यो भन्ने कामना गरेको पनि पाइन्छ, तर यो भावुक आवेग मात्र हो ।

विश्वको इतिहासले भन्छ, निरङ्कुशताले जनआकांक्षालाई सम्बोधन गरेको कतै भेटिँदैन । निरङ्कुशताले देशलाई सही निकास दिएको कहीँकतै छैन । आजसम्मको संसारको इतिहास हेर्दा जब देशमा राजनीतिक संगठनहरू प्राविधिक रूपमा एकै ठाउँमा रहे पनि आन्तरिक रूपमा छिन्नभिन्न हुन्छन्, यस्तो परिस्थितिमा निरङ्कुशताको उदय हुन सहज हुन्छ । जनसंगठनहरूले समाजमा राजनीतिक अन्तर्क्रियालाई जीवन्त बनाउँछन्; देशभित्र बेलाबेला देखापर्ने सामाजिक विकृति, विसंगति तथा खराबीका आवाज बुलन्द पार्छन्; शक्तिको उन्मादमा सत्तामा हुने गलत निर्णयका विरुद्ध जनआवाज मुखरित गर्छन् ।

जनसंगठनहरू कमजोर हुँदा सत्ता निरङ्कुश बन्दै जान्छ । अहिले नेपालको परिस्थिति हेर्दा निरङ्कुशता मौलाउने वातावरण बन्दै गएको देखिन्छ । मानिसहरू अहिलेको यो अन्योल र अराजकतापूर्ण राजनीतिक परिस्थितिभन्दा विगतको राजतन्त्र नै ठिक हो भन्न पुगेका छन् । कतिपयले जंगबहादुरकै खोजी गरेको पाइन्छ । वास्तवमा देशले न फेरि अर्को जंगबहादुरको सहन गर्न सक्छ, न त राजतन्त्रलाई फर्काउन सक्छ । सस्तो भावुकता वा आवेगपूर्ण आकांक्षालाई रोक्नैपर्छ, इतिहास कुनै पनि सर्तमा पछाडि फर्कंदैन । समय त उथलपुथलपूर्ण राजनीतिक विकासकै बिच निरन्तर अगाडि बढिरहन्छ ।

नेपालको समग्र राजनीतिमा अहिले एउटा शैली र संस्कारमा अभ्यस्त भइसकेको ६० कटेको पुस्ता हाबी छ । यो लामो राजनीतिक अस्थिरताको कारक यही पुस्ता हो, जुन पुस्ता सहजै आफ्नो संस्कार र शैली बदल्न सक्दैन ।

देशको भविष्य युवाहरूको हातमा हुन्छ । त्यसैले युवा विद्यार्थीले बाँकी राजनीतिलाई सही ट्र्याकमा ल्याउने उपायमा लाग्नैपर्छ । युवा विद्यार्थीले गहिरिएर सोच्नैपर्छ कि आफ्नो भविष्य अरुका काँधमाथि फालेर कसैको स्वार्थको गोटी बन्नु हुँदैन ।

यसअघिको पुस्तामा विकास भएको राजनीतिक शैली र संस्कारले आजको जुन अवस्था निम्त्याएको छ, त्यही शैली र संस्कारलाई अपनाएर आजको विद्यार्थी आन्दोलनले देशको सही नेतृत्व दिन सक्दैन । नेपालको शैक्षिक, सामाजिक तथा राजनीतिक समस्यालाई समाधान गर्न नेपाली विद्यार्थी आन्दोलनलाई सशक्त पार्नैपर्छ ।

स्पष्ट वैचारिक दृष्टिकोणयुक्त युवा विद्यार्थी आन्दोलनको विकासमा सबैले ध्यान दिनैपर्छ । जनसंगठनहरूभित्र भइरहेका व्यक्तिकेन्द्रित गलत सांगठनिक अभ्यासलाई अन्त्य गरी तीव्र वैचारिक बहसलाई बढावा दिएर विचार निर्माणको अवयवका रूपमा विद्यार्थी संगठनहरूलाई विकास गर्नु जरुरी छ । विद्यार्थी संगठनहरूभित्र मौलाउँदै गएको वैचारिक अन्योलता, दिशाहीनता र व्यक्तिकेन्द्रित राजनीतिक कुसंस्कारलाई चिरेर कुहिरोभित्र हराएको आन्दोलनलाई स्पष्ट वैचारिक दिशा प्रदान गर्नु आजको आवश्यकता हो ।

(हमाल अखिल (क्रान्तिकारी) की केन्द्रीय उपमहासचिव हुन् ।)

-रातोपाटीबाट

# चाडपर्वका नाममा अतिरिक्त पोसाक किन्न बाध्य नपार्न महानगरको निर्देशन

काठमाडौं । विद्यार्थीहरुलाई विभिन्न चाडपर्व लक्षित पोशाक खरिद गर्न बाध्य नपार्न विद्यालयहरुलाई भरतपुर महानगरले निर्देशन दिएको छ । महानगरले पत्रचार गर्दै चाडपर्वका बेला फजुल खर्च गरेर पोशाक खरिद गर्नुपर्ने बाध्यात्मक अवस्था बन्द गर्न विद्यालयहरुलाई निर्देशन दिएको हो ।

"विभिन्न चाडपर्व, धर्म र संस्कृतिको सर्न्दभ पारेर विद्यार्थीहरुलाई त्यस्ता चाडपर्वसँग सम्बन्धीत पोशाकहरु खरिदका लागि बाध्य गराइएको भन्ने गुनासो प्राप्त भएकाले यसो नगरी विद्यालयले नै यस्ता पोशाक नमूनाका रुपमा उपलब्ध गराई शिक्षण सिकाई गर्नुहुन अनुरोध गरिन्छ", महानगरले विद्यालयहरुलाई पठाएको पत्रमा उल्लेख छ ।

भरतपुर महानगर शिक्षा शाखाका अधिकृत ऋषिराम शर्माले विद्यालयहरुले शिक्षण सिकाइका नाममा चाडपर्व लक्षित पोशाकहरु खरिद गर्न लगाएर अभिभावकहरुको फजुल खर्च गराइएकाले सो रोक्न जरुरी रहेको बताए ।

"कृष्ण जन्माष्टमीमा कृष्णको पोशाक, तिहारमा गून्यो चोलो, क्रिसमसमा क्रिसमस ड्रेस अनि ईदमा कालो बुर्का जस्ता पोशाक किन्न लगाएर विद्यालयहरुले फजुल खर्च गराएका छन् यो अभिभावकहरुवाट गुनासो आएपछि रोक्न जरुरी देखिएको हो", उनले भने । विद्यालयहरुलाई शिक्षण सिकाइका लागि चाडपर्व लक्षित पोशाकहरु आवश्यक परे नमुनाका रुपमा विद्यालयले नै ब्यवस्था गर्न सक्ने पनि उनले बताए ।

यो समस्या विशेषत संस्थागत विद्यालय तथा मन्टेश्वरीमा अध्ययन गर्ने विद्यार्थीहरुमा बढी छ । निजी तथा संस्थागत विद्यालय अर्गनाइजेशन चितवनका अध्यक्ष कृतिनिधी अर्यालले भने धर्म संस्कृति सुहाउदो पोशाक लगाउने सवालमा नराम्रो मान्न नहुने बताउँछन् । "हाम्रो धर्म संस्कृति सुहाउँदो पोशाक लगाउँदै गर्दा धर्म संस्कृतिका सम्बन्धमा शिक्षण सिकाइमै सहयोग पुग्ने हो यसलाई फजुल खर्चका रुपमा बुझ्न भएन", उनले भने ।

यस सम्बन्धमा प्यावसनले सामूहिक रुपमा छलफल गरेर एउटा आफ्नो धारणा सार्वजनिक गर्ने पनि उनले बताए । यस्तै, महानगरले पोशाकसँगै विद्यालयहरुको नयाँ भर्नामा स्वागत र विदाई भएर जाने विद्यार्थीको विदाइका लागि होटल तथा पार्टी प्यालेसहरुमा फजुल खर्च नगरी आफ्नै विद्यालयमा गर्न गराउन पनि निर्देशन दिएको छ । भरतपुर महानगरले लागु गरेको स्थानीय पाठ्यक्रम अनिवार्य रुपमा लागु गराउन, विद्यालय बाहिर नाटक तथा फिल्म हेर्नका लागि विद्यार्थीबाट शुल्क उठाउने कार्य रोक्न पनि पत्रमा निर्देशन दिएको छ ।

पाँच बुँदे सो निर्देशन पत्रमा शिक्षा ऐन २०२८ र नियमावली २०५९, भरतपुर महानगर शिक्षा ऐन २०७५ विपरित विद्यार्थीहरुबाट कुनै शुल्क नलिन पत्रमा आग्रह गरिएको छ ।

# नगरपालिकाको बजेटमा वडा अध्यक्षको हस्तक्षेप




वालिङ् । वालिङ नगरपालिकाले १६ औं नगरसभा सम्पन्न गरेको २ महिनासम्म पनि चालु आवको योजना सार्वजानिक गर्न सकेको छैन । नगरपालिकाको गत असारमा आर्थिक वर्ष २०८१/८२ का लागि बजेट विनियोजन गरेपनि जनप्रतिनिधिको एक आपसको द्वन्दका कारण योजना सार्वजानिक हुन नसकेको हो ।

स्थानीय तहको बजेट निर्माण उपप्रमुख ले गर्ने कानुनी प्रावधान रहेको छ । वालिङ नगरपालिकामा उपप्रमुखले बजेट तथा योजना प्रस्ताव गरेको कार्यपालिकाले स्वीकार नगरेपछि विवाद श्रृजना भएको थियो । त्यसपछि उपप्रमुखको अधिकारमाथी वडा अध्यक्षहरुले हस्तक्षेप गरी नगर प्रमुख र वडा अध्यक्षहरुले योजना निर्माण गरेका हुन । यो प्रकृयामा उपप्रमुखको सहभागिता रहेको छैन् । उपप्रमुखले प्रस्ताव गरेको बजेट भन्दा फरक निर्माण गर्दा नगर स्तरीय अधुरा योजनामा रकम विनियोजन गरिएको छैन ।

यस अधि नगरसभावाट प्रत्येक वडालाई ५० लाख र १४ नं वडालाई ६० लाख वडास्तरीय बजेट तोकिएकोमा पुन वडा अध्यक्षहरुले २० लाख र कार्यपालिका सदस्यहरुले ५ लाख गरी योजना वाडफाँड गरेको नगरपालिका स्रोतले जानकारी दिएको छ । नगरपालिकाको रणनैतिक कार्ययोजना, अल्पकालिन र दीर्घकालिन योजना अलपत्र परेका छन् । यसरी नगरपालिकाको बजेटमा वडा अध्यक्षको प्रत्यक्ष हस्तक्षेपको नागरिकले विरोध जनाउन थालेका छन् ।

नगरपालिका स्थापनाको पहिलो २०५२ सालमा नामाकरण गरिएको रिङ रोड मिर्दी भिमटारी विपिचोक हुँदै डुम्रिकोट सडक २ वर्षदेखि अलपत्र पारेर निर्माण रोकिएको र यस वर्ष पनि बजेटले सम्वोधन नगरेपछि नागरिकहरु आन्दोलित भएका छन् ।

चालु आर्थिक बर्षको बजेटले गौरवका आयोजना समेत नसमेट्ने र टुक्रे योजना बनाई नगरपालिकाको बृहत्तर विकासमा असर परेको भन्दै ध्यानाकर्षण समेत गराएका छन् । वालिङ नगरपालिकाको राजधानीको रुपमा रहेको ८ नम्वर वडाका नागरिकहरुले वडा अध्यक्ष र नगर प्रमुखलाई एक हप्ताको अल्टिमेटम सहितको ध्यानाकर्षणपत्र वुझाएका छन् ।

वालिङको वैकल्पिक सडकको रुपमा प्रयोग हुने उक्त सडक निर्माणमा नगरपालिका उदासिन बनेकोले नगरपालिका र वडा कार्यलयका विरुद्ध संघर्षका कार्यक्रम सार्वजानिक गरी आन्दोलन गर्न वाध्य भएको संघर्ष समितिका संयोजक हुमनाथ अर्यालले जानकारी दिए । मुलुकमा संघिय लोकतान्त्रिक गणतन्त्र स्थापना भएपछि सिंहदरबारको अधिकार गाउँ–गाउँमा पुग्ने अपेक्षा नागरिकले गरेका थिए तर गाउँगाउँमा पुगेका सिंहदरबारहरु भष्ट्रचारमा लिप्त हुन थालेको ज्ञापनपत्र मार्फत आरोप लगाईएको छ ।

स्थानीय तहलाई जनताको घरदैलोको सरकारको रुपमा लिएका छौं ज्ञापनपत्रमा भनिएको छ,'नागरिकको आवश्यकता भन्दा पनि जनप्रतिनिधिले लाभलिने योजनालाई प्रथामिकतामा दिन थालिएको महशुष गरिएको छ ।' जसले गर्दा नगरपालिकाको गौरवाका आयोजना अलपत्र पार्ने र जनप्रतिनिधिले लाभ लिने कार्य बन्द गर्नुपर्छ वडावासीको तर्फबाट संयोजक अर्यालले बुझाएको ज्ञापनपत्रमा उल्लेख गरिएको छ । नगरपालिकाको १६ औं नगरसभाबाट सार्वजनिक भएको बजेटमा उक्त सडक बनाउने प्रतिवद्धता ७ दिनभित्र दिन नसकेमा वडा कार्यालय सहित नगरपालिकामा समेत तालाबन्दी गर्ने चेतावनी वडावासीले दिएका छन् । तालाबन्दी पछि नागरिकमा पर्ने असुविधाको वडा कार्यालय र नगरपालिका जिम्मेवार हुनुपर्ने समेत वडावासीले चेतावनी दिएका छन् ।

वडावासीको ज्ञापनपत्र बुझ्दै नगर प्रमुख कृष्ण खाँणले सिमित साधनश्रोतले नगरको विकासमा भनेजस्तो काम गर्न नसकिएको उल्लेख गरे । नगरपालिकाकै पुरानो यो सडक निर्माणका लागि नगरपालिकाले छिट्टै निकास दिने प्रतिवद्धता समेत व्यक्त गरे । वालिङ नगरपालिकाले ३ ओटा सडकलाई प्रथामिकतामा राखेको छ ज्ञापनपत्र बुझ्दै नगर प्रमुख खाँणले भने,'प्रथामिकतामा राखेका सडक निर्माणका लागि प्रदेश र संघिय सरकारसगँ माग गर्ने योजनामा छौं ।' जनप्रतिनिधिलाई झकझक्याउने काम गरेकोमा वडावासी धन्यवादको पात्र हुनुभएको छ उनले भने ।

वडा नम्वर ८ का वडा अध्यक्ष दामोदर तिवारीले वडावासीको माग प्रति आफु गम्भीर रहेको बताए । नगरपालिकामा प्रयाप्त बजेट नहुँदा सडक बनाउन ढिलाई भएको तिवारीको भनाई छ । वडावासीले दिएको सुझावलाई आफुले अनुसरण गर्दै यो सडक निर्माणमा वडा कार्यालयको पुर्ण सहयोग हुने प्रतिवद्धता व्यक्त गरे । वालिङ नगरपालिकाले आर्थिक बर्ष २०८१/०८२ का लागि ९६ करोड १४ लाख ४१ हजार रुपैयाँ बजेट बिनियोजन गरेको छ । जनप्रतिनिधिहरुको बिवादका कारण अहिले सम्म पनि बजेट पारित नभएको बताइएको छ ।

# संयुक्त नागरिक र आमूल परिवर्तन रिपब्लिकन पार्टीबीच एकता

काठमाडौं । दल मर्दन कामी नेतृत्वको संयुक्त नागरिक पार्टी र भरत गिरी नेतृत्वको आमूल परिवर्तन रिपब्लिकन पार्टीबीच एकता घोषणा भएको छ। यी दुबै पार्टीबीच एकता भएर आमुल परिवर्तन नागरिक पार्टी घोषणा भएको हो।

पार्टी एकतापछि विगतमा भएका कमी कमजोरीलाई सच्याउँदै मुलुकको परिस्थतिलाई मध्यनजर राख्दै मिसन ८४ लक्षित योजना बनाई अघि बढ्ने बताइएको छ। अहिले पार्टीको अध्यक्षमा दुबै जना कायम रहेका छन्।

उनीहरुले ठूला भनिएका पार्टीहरूबाट गणतन्त्रको उपहास गर्दै मुलुकलाई भडखालोमा हाल्ने काम भइरहेको र यसको विकल्पमा पार्टी एकीकरण गरिएको बताएका छन्।

यस्ता छन् राजनीतिक एजेण्डाहरु:

१. औद्योगिक क्रान्ति नै आर्थिक समृद्धिको एकमात्र विकल्प भएकोले देशमा औद्योगिक क्रान्ति शुरु गर्नेछौं।

२. नेपालको-भारतसंग गरेको असमान शन्धि खारेज गरी नेपालले गुमाएको भुमि फिर्ता गर्न आवश्यक कदम चाल्ने साथै नेपालको हित विपरित गरेका विभिन्न सम्झौताहरु खारेज गर्ने।

३. सिमा क्षेत्रमा रहेका जनतालाई छिमेकीबाट दिदैं गरेको पीडाबाट मुक्त गर्न सिमानामा तारबार तथा पर्खाल निर्माणको काम फत्ते गर्ने।

४. तराई क्षेत्रमा हुने शीतलहरको शिकार तथा डुबानबाट जोगाउन साथै पहाडी भेगमा वर्षेनी हुने पैरोबाट जोगाउने नीति अबलम्बन गर्ने।

५. गरिबी उन्मुलन कार्यक्रम गरिवीको रेखामुनी परेकालाई राज्यले पालनपोषण गर्ने, तथा विदेश गएकाहरुलाई देश फरक र देश निर्माण अभियान चलाउने।

६. सार्वजनिक पद दुरुपयोग गरी कमाएका सम्पूर्ण अकूत सम्पति राष्ट्रियकरण गरिने।

७. नागरिकता बिहिन नागरिकहरुलाई नागरिकता प्रदान गर्ने ताकी नागरिक भएर पनि नागरिकता नपाउने नीति पुर्णरुपमा अन्त्य गरी उमेर पुगेका कुनैपनि नागरिक नागरिकता विहिन नहुने।

८. नेपाल बन्द, हडताल तथा तोडफोडको आन्दोलन पुर्णरुपमा रोकी आन्दोलनको मापदण्डको व्यवस्था ल्याई कडाईका साथ लागु गर्ने।

९. इन्टरनेट राज्यले देशै भरि निशुल्क गर्ने ताकी कोहीपनि संचार विहिन वा संचारको निम्ति खर्च गर्न नपरोस।

१०. देशै भरि सबैको निम्ति निशुल्क स्वास्थ्य परिक्षण तथा उपचारको व्यवस्था गर्ने।

११. देशमा हत्या हिंसा पूर्णरुपमा रोक्न सबै निशस्त्रिकरण अभियान चलाउने।

१२. सबै अल्प संख्याक धार्मिक समुदायहरुको आयोग निर्माण गर्ने तथा सामाजिक कुप्रथा उन्मुलन आयोग गठन गर्ने।

१३. सबै अल्प संख्याक जाती तथा सीमान्तकृतहरुको उत्थान र विकास निर्माण सम्बन्धि आयोग गठन गरि सबैको समान विकास गर्ने।

१४. देशमा नयाँ कानुन निर्माण गरी भ्रष्टाचार, घुसपैठ, हत्या, बलात्कार, मानब बेचबिखन तथा देशको राष्ट्रिय अखण्डता वा सार्वभौम प्रतिकुल क्रियाकलापलाई सर्वस्व सहित जन्म कैदको व्यवस्था गरिने।

१५. पंचायतकाल देखि सार्वजनिक पदमा रही कमाएका कालोधन राष्ट्रियकरण गर्ने।

१६. कुनैपनि राजनीतिक नेता तथा सार्वजनिक पदमा रहेकाहरुलाई स्वास्थ्य परिक्षण गर्न,छोराछोरी विदेश पढाउन साथै विदेशी बैंकमा रकम जम्मा गर्न पुर्णरुपमा बन्द गर्ने।

१७. देश विकासमा सेना तथा आवश्यक संख्यामा जनशक्ति खडा गरि राष्ट्र निर्माण गरिने तथा गलत मुद्दामा फसाई लामो जेल जीवन व्यतित गरिरहेकाहरुलाई छानबिन गरि जेल मुक्त गरिने साथै लामोसमयसम्मको लागि थुनामा परेकाहरुलाई देश निर्माणमा लगाउने ताकी थुनिएर समय बिताउनुपर्ने बाध्यतालाई अन्त गरी राष्ट्र निर्माणमा महत्वपूर्ण योगदान दिलाउने।

# यी ७ खानेकुरा नखानु–डब्ल्यूएचओ

एजेन्सी । आधुनिक जीवनशैलीमा यस्ता धेरै खानेकुरा बन्न थालेका छन् जसले जिब्रोका लागि स्वाद त दिन्छ तर घाँटीसम्म पुग्दा पूरै शरीरमा त्यसले विषको का मगर्न सक्छ । अवश्य यो तुरुन्तै पत्ता लाग्दैन तर बिस्तारै यसले शरीरलाई खोक्रो बनाउन थाल्छ । यही कारण विश्व स्वास्थ्य संगठन (डब्लुएचओ) ले यस्ता धेरै खानेकुराहरूको सूची सार्वजनिक गरेको छ जसको बारेमा मानिसहरूलाई यी खानेकुराहरू पटक्कै नखान वा खाएमा पनि थोरै खाने निर्देशन दिइएको छ । खानाको यो सूचीमा धेरै खानाहरू समावेश छन् जुन धेरै मानिसहरूले दैनिक उपभोग गर्छन् । यी कस्ता खानेकुरा हुन् जानौँ ।

यी खानेकुरा खानुअघि एक पटक अवश्य सोच्नुहोस्

१.पास्ता र रोटी-रिपोर्टमा जनाए अनुसार रिफाइन्ड कार्बोहाइड्रेट संसारमा सबैभन्दा अस्वस्थ चीज हो । पास्ता र रोटी परिष्कृत कार्बोहाइड्रेटबाट मात्र बनाइन्छ । मीठो खाजामा पनि परिष्कृत कार्बोहाइड्रेट हुन्छ । यी चीजहरूले रगतमा चिनीको मात्रा बढाउँछ । पास्ता र रोटी अल्ट्रा-प्रोसेड चीजहरू भइसकेका छन् जुन खाना खानु अघि १० पटक सोच्नुपर्छ ।

२. आलु चिप्स - हामी मध्ये धेरैको लागि आलु चिप्स मनपर्ने खानेकुराको रुपमा पर्दछ । अझ यो वच्चाहरुको लागि त अति प्रिय खाजा नै हो । आलुका चिप्सलाई परिष्कृत तेलमा धेरै उच्च तापक्रममा तताइन्छ । यसमा धेरै नुन प्रयोग गरिन्छ । यी दुवै कुरा स्वास्थ्यका लागि निकै हानिकारक छन् । यसमा धेरै क्यालोरी पनि हुन्छ । जसको पाचन गर्न शरीरको लागि धेरै मेहनत गर्नु पर्ने हुन्छ ।

४. पाम तेल- आजकल पाम तेल धेरै घरहरूमा प्रयोग गरिन्छ । पाम तेल धेरै खतरनाक छ । यसले मुटुमा ठूलो हानि पुर्‍याउँछ । पाम तेलले कोलेस्ट्रोल बढाउँछ । त्यसैले पाम तेलको सेवन गर्नु हुँदैन ।

४. पिज्जा र बर्गरहरू - पिज्जा र बर्गरहरू अति-प्रशोधित खानाहरू हुन् जसमा धेरै बटर, चीज, नुन र धेरै प्रकारका रसायनहरू प्रयोग गरिएको हुन्छ । यी सबै कुराले तौल छिटो बढाउँछ । त्यसैले पिज्जा बर्गरको खपत कम गर्नुपर्छ ।

५. चिज- चिज धेरै चीजहरूमा प्रयोग गरिन्छ । चिज पनि एक अल्ट्रा प्रशोधित खाना हो जसमा संतृप्त र ट्रान्स फ्याट हुन्छ । यो हाम्रो लागि धेरै हानिकारक छ । यसले हृदय रोगको जोखिम बढाउँछ । यसले पनि मोटोपना निम्त्याउँछ ।

६. अत्याधिक नुन - कुनै पनि हालतमा एक दिनमा ५ ग्राम भन्दा बढी नुन खानु हुँदैन । धेरै नुनको सेवनले रक्तचाप बढ्छ र गम्भीर हृदय रोग निम्त्याउँछ । तसर्थ, नुनको मात्रा धेरै भएको चीज एकदमै कम खानुपर्छ वा पटक्कै खानु हुँदैन ।

७. धेरै चिनी - चिनी बिना मानव जीवन कल्पना गर्न सकिँदैन, तर धेरै चिनी हाम्रो लागि धेरै खतरनाक छ । अत्यधिक चिनीको सबैभन्दा ठूलो परिणाम मोटोपना हो । यसले तनाव बढाउँछ । धेरै चिनीले कलेजो, प्यान्क्रियाज र आन्द्राको समस्या बढाउँछ । त्यसैले धेरै चिनीको सेवन गर्नु हुँदैन । चिनीको मात्रा बढ्यो भने चिनी खानु हुँदैन ।

# विश्वमा पुनः लकडाउनको खतरा !

एजेन्सी । अफ्रिकी देशहरूमा तीव्र गतिमा फैलिरहेको एमपोक्सको रोग विश्वका लागि नयाँ कोरोना साबित हुन सक्ने र यसका कारण विश्वभर पुनः लकडाउन हुनसक्ने चिन्ता अहिले विश्वभर छाएको छ । कोरोनाका कारण बन्दाबन्दीका कारण परेको चरम अप्ठ्यारा सम्झँदा पनि मानिसहरु काँप्नु स्वाभाविक हो । यस्तो अवस्थामा विश्व स्वास्थ्य संगठन (डब्लुएचओ)का विशेषज्ञ डा हान्स क्लुगेले स्पष्ट जवाफ दिएका छन् । डा. हान्स क्लुगेले भनेका छन् कि एमपोक्स नयाँ कोविड होइन किनभने अधिकारीहरूलाई रोगको फैलावटलाई कसरी रोक्ने भन्ने थाहा छ । एमपोक्सको नयाँ संस्करणले फेरि एक पटक लकडाउन गर्न सक्छ कि भनेर सोध्दा उनले त्यस्तो कुनै सम्भावना नभएको बताएका छन् ।

एमपोक्सको खतरनाक भेरियन्टहरूको विश्वव्यापी डर

अफ्रिकापछि युरोपमा केही देशहरुमा यस सम्वन्धि केस देखा परे पछि युरोपका जनतामा पनि डर देखिएको छ । एमपोक्सको नयाँ भेरियन्ट क्लेड एलवि ऋबिमभ क्ष्द एकदमै खतरनाक छ र यस रोगबाट मृत्युको जोखिम १० देखि ११ प्रतिशत हुन्छ । यो देखेर विश्वभर त्रास छाएको छ । विशेषगरी युरोपका जनतामाझ यस विषयमा डब्लुएचका युरोपका क्षेत्रीय निर्देशक डा हान्स क्लुगेले भने कि भाइरसको नयाँ संस्करणको बारेमा चिन्ता पक्कै छ, तर हामी मिलेर यो रोगको संक्रमण रोक्न सक्छौं । हालैका महिनाहरूमा, प्रजातान्त्रिक गणतन्त्र कंगोमा एमपोक्सको कारण ४५० जनाको ज्यान गएको छ र स्वीडेनमा पनि एक केस रिपोर्ट गरिएको छ । विज्ञहरू भन्छन् कि हामीले नयाँ भेरियन्टको बारेमा धेरै जान्न आवश्यक छ, तर हालको अवस्था यो छ कि यो रोग सजिलै फैलने र गम्भीर हुन सक्छ ।

एमपोक्स एक विश्वव्यापी स्वास्थ्य आपतकाल हो

यस वर्षको अप्रिलमा प्रजातान्त्रिक गणतन्त्र कंगोमा मोन्कीपक्स भाइरसको नयाँ प्रजाति फेला परेको थियो । यद्यपि, यसको पहिलो केस २०२२ मा लन्डनमा मात्र देखिएको थियो । कंगोमा हालसम्म ४५० जनाको मृत्यु भइसकेको छ । यो रोग यति खतरनाक छ कि यसले संक्रमित १० मध्ये एक जनालाई मार्न सक्छ । यो रोग अहिले कंगो बाहिर पनि फैलिन थालेको छ । त्यसैले डब्ल्यूएचओले भर्खरै यसलाई विश्वव्यापी स्वास्थ्य आपतकाल घोषणा गरेको छ ।

एमपोक्सको लक्षण

मेयो क्लिनिकका अनुसार एमपोक्स संक्रमणको प्रभाव संक्रमण भएको ३ देखि १७ दिनपछि देखिन थाल्छ । सङ्क्रमणको प्रभाव देखा परेपछि बिरामीमा ज्वरो आउने, छालामा चाउरीपना हुने, टाउको दुख्ने, शरीर दुख्ने, ढाड दुख्ने, चिसो र थकान जस्ता लक्षण देखिन थाल्छन् । मोन्कीपक्समा, छालामा दाग मुख्यतया मुख, हात र खुट्टामा देखा पर्दछ ।

कस्ता मानिसहरू बढी जोखिममा छन् ?

अहिलेसम्म जानकारीमा आए अनुसार वैज्ञानिक प्रमाणहरूका आधारमा समलिङ्गी पुरुषहरूमा एमपोक्स संक्रमण बढी हुन्छ । यसको अर्थ पुरुषसँग यौनसम्पर्क गर्ने पुरुषलाई यो रोगको बढी जोखिम हुन्छ । तसर्थ, कंगोमा यौनकर्मीहरूमा यो रोगको बढी घटनाहरू रिपोर्ट गरिएको छ । यद्यपि, यसको मतलब यो होइन कि समलिङ्गी पुरुषहरूलाई मात्र यो रोग लाग्न सक्छ, तर संक्रमित व्यक्तिको नजिकको सम्पर्कमा आउने मानिसहरूलाई पनि एमपोक्सको उच्च जोखिम हुन्छ ।

# उपाकलं सायाःमा नृसिंह बने संचारकर्मी राजीव

फोटोः विक्रम खड्गी

बिराज

नेपालभाषाको संचार क्षेत्रमा सक्रिय संचारकर्मी राजीव राजोपाध्याय नरसिंह बन्न पाउनु आफ्नो अहोभाग्य ठान्छन् ।

गत शनिबार भाद्र ८ गते ललितपुरमा सम्पन्न नृसिंह जात्रा उपालकं सायाःमा नरसिंह बन्न पाएर निकै खुसी छन् संचारकर्मी राजोपाध्याय ।

'भाग्यले पाएको अवसर ठान्छु यसलाई । यस पालि आफैं नरसिंह बनेर धार्मिक, सांस्कृतिक परम्परालाई निरन्तरता दिन पाउँदा निकै खुसी छु' राजोपाध्यायले भने ।

हुन पनि भनेर पाइने अवसर पनि होइन यो । पालो आइहाल्छ नि भनेर पाइने पनि होइन ।

ललितपुरको षटकुल राजोपाध्याय देव ब्राह्मणहरुको उपाकर्म गुठीमा जेष्ठताको आधारमा पालो दिँदै गुठी चलाइन्छ । यसरी गुठी पालो पाएको गुठीका सदस्यले भाद्र कृष्ण पंचमीका दिनमा नृसिंह जात्रा निकाल्ने गर्दछन् ।

यस क्रममा पालोवालाका ज्वाइँ अथवा भान्जा अथवा पुरोहितलाई नरसिंह बनाइ ललितपुरको सायाः रुटमा परिक्रमा गराउने गरिन्छ । वर्षभरीमा परिवारमा दिवंगत भएकाहरुको उद्धारको कामना गर्दै आम नागरिकले नरसिंहको पूजा गर्ने परम्परा रहेको छ ।

गुठीका जेष्ठ सदस्यले पालो पाउने भएपछि कैयनको लागि आफ्नो उमेर नै पालो चलाउनको लागि बाधक बनिदिन्छ । कतिपय अवस्थामा पालो लिने व्यक्तिको पालो लिनु अघि नै मृत्यु भएको देखिन्छ ।

यस पटक गुठीको पालो पिम्बहालका स्वर्गीय नृपेन्द्र राज शर्माले पाएका थिए । शर्माले पालो त लिन भ्याए तर, पालो लिएपछि गत २०८० फागुन ५ गते उनको निधन भयो ।

शर्माको निधन पछि उनको परिवारले यस वर्षको जात्रा संचालन गरे ।

'पालो लिनु अघि नै मृत्यु भएमा उमेरको हिसाबले त्यस पछिको गुठीका सदस्यले पालो लिन्छन् तर, पालो लिइसकेको अवस्थामा पालोवालाको निधन भएपनि उनको परिवारबाट यो जात्रा सम्पन्न गर्ने परम्परा रहेको छ', उपाकर्म गुठी व्यवस्थापन समितिका उपाध्यक्ष संजय शर्मा राजोपाध्यायले भने । 'त्यसैले यस वर्ष पनि पालोवाला नृपेन्द्रराज शर्माको निधन भएपनि उनको परिवारबाट यो जात्रा सम्पन्न भएको छ ।'

यस वर्षको गुठीको पालो स्वर्गीय शर्माको भएकोले जात्रामा उनका ज्वाइँ एबीसि टेलिभिजनमा प्रसारण भइरहेको नेपालभाषाको कार्यक्रम 'झीगु सः' का दृश्य सम्पादक साथै नेवाः अनलाइन न्यूजमा समेत कार्यरत संचारकर्मी राजोपाध्याय नरसिंह बनेका थिए ।

'विश्वशान्ति, प्राकृतिक प्रकोपबाट मुक्ति साथै पितृ उद्धारको कामना गर्दै गरिने जात्रा हो । यस्तो पवित्र उद्देश्य बोकेर गरिने जात्रामा आफैं मुख्य पात्र नरसिंह बनेर परम्परा सम्पन्न गर्ने अवसर पाएकोमा मैले आफुलाई भाग्यमानी ठानेको छु' संचारकर्मी राजोपाध्यायले भने ।

स्वर्गीय शर्माको निधन पछि जात्रामा उनले निर्वाह गर्नुपर्ने भूमिका र कर्तव्य सबै उनका जेष्ठ सुपुत्र त्रिलोचन राज शर्माले सम्पन्न गरेका थिए ।

'जात्रा अघि नै बुवाको निधन भयो, पितृको उद्धारको लागि गरिने यो जात्रामा बुबाले बैकुण्ठमा बास पाओस् भन्ने कामनासहित जात्रा सम्पन्न गर्यौं । सक्दो राम्रो र व्यवस्थित गर्न कोशिश गरेका छौं' शर्माले भने ।

जात्राको दौरान नरसिंहले नगर परिक्रमा गर्ने क्रममा उनको दायाँबायाँ लक्ष्मी र सरस्वती पनि हुन्छन् । त्यस्तै नरसिंहको अगाडी धुप समाएर नमस्कार गर्दै प्रह्लाद उल्टो हिँड्छन् ।

यस वर्षको जात्रामा लक्ष्मी काठमाडौं ढोकाटोलका सजन राजोपाध्याय र सरस्वती पिम्बहालका आदित्य राजोपाध्याय बनेको थिए । त्यस्तै प्रह्लाद भने पिम्बहालका तिलक राजोपाध्याय बनेका थिए ।

साथमा कुचो, लावा अभीर, गाइको दुध, पंखा, चमर र दण्ड समाएका अप्सराहरुको ६ जोडी पनि नरसिंहसँगै नगर परिक्रमा गर्ने गर्दछन् ।

पालोवालाकै घरबाट सुरु भई पाटनको सायाः रुट परिक्रमा गरी सुरु भएकै स्थानमा पुगी जात्रा सम्पन्न गर्ने परम्परा छ । यस वर्ष पाटनको पूर्णचण्डीबाट जात्रा सुरु भएको थियो ।

पूर्णचण्डीबाट गाःबहाल हुँदै पिम्बहाल, बालिफल, क्वालखु, कुम्भेश्वर, क्वबहाल, स्वथ, मंगलबजार, सुन्धारा, ओकुबहाल, थैना, टंगल, तिच्छुंगल्ली, इखालखुबाट पूर्णचण्डीमै पुगेर जात्रा सम्पन्न गरिएको थियो ।

जात्राको परिचय र इतिहास

नरसिंहलाई भगवान नारायणका चौथो अवतारको रुपमा लिइन्छ । हिरण्यकश्यपुको वध गर्दै आफ्ना भक्त प्रल्हादको रक्षा गर्न नारायणले नरसिंह अवतार लिएका थिए ।

नरसिंह भन्ने वित्तिकै सबैले कल्पना गरिहाल्छन् मानव शरीर तर टाउको सिंहको, एकदमै उग्र रुपका । तर ललितपुरमा निकालिने उपाकलं सायाःका नरसिंह शान्त स्वरुपका हुन् ।

कार्तिक नाचमा निकालिने नरसिंह हिरण्यकशिपुको वध गर्न प्रकट भएका उग्र स्वरुपका हुन् भने उपालकं सायाःको नरसिंह हिरण्यकशिपुको वध पछि शान्त भइसकेका नरसिंह हुन् ।

नरसिंह भन्ने वित्तिकै वैष्णव मत हो भनी सबैलाई थाहा छ । तर यो जात्राको एउटा विशेषता भनेको यसमा विष्णुको साथै शक्तिको पनि आराधना गरिन्छ ।

नरसिंहको पछाडी कपडाबाट बनाइएको दुइवटा पुतली पनि बाँधिएको हुन्छ र नरसिंह हिँड्ने बेला सोही पुतलीलाई घिसार्दै जान्छन् । रुन्चे लागेका बालबालिकालाई यो पुतली ढोग्न लगाएमा रुन्चे निको हुन्छ भन्ने जनविश्वास रहेको छ ।

नरसिंहले हिरण्यकशिपुको वध गरेको हुनाले यी पुतलीहरुलाई हिरण्याक्ष र हिरण्यकश्यपु भन्ने गरिन्छ । तर यी पुतलीहरु मधु र कैटभ हुन् भनी यस जात्राका विज्ञ मानिएका स्वर्गीय संस्कृतिविद् हेरम्वानन्द राजोपाध्यायले बताएका छन् । 'मधु र कैटभको वध कालीको साथ लिइ नारायणले गरेका थिए । मधु र कैटभलाई घिसार्दै हिँडेका उपाकलं सायाःका नरसिंहको अग्र भाग नरसिंह हो भने पछाडीको भाग काली हो' स्वर्गीय संस्कृतिविद् राजोपाध्यायको भनाई थियो ।

ललितपुरको कार्तिक नाचकै क्रममा पनि कार्तिक शुक्ल त्रयोदशिको दिन नरसिंह अवतार प्रदर्शनभन्दा अघि ललितपुरमा तलेजुमा कालीको पूजा गर्ने परम्परा रहेको छ । यसप्रकारले कार्तिक नाचको क्रममा पनि कालीकै पूजा गर्ने परम्पराले नरसिंह र कालीको सम्वन्ध देखाउँछ ।

यो नृसिंह जात्रा भन्दा अघि विगतमा श्रीधर नारायणको जात्रा हुने गर्दथ्यो भनेर समाजका अग्रजहरु बताउने गर्छन् ।

एकपटक जात्राको दौरान केही समूहबाट आक्रमण भएर श्रीधर नारायणको जात्रा रोकिएको र नरसिंह जात्रा चलाउन थालिएको भनाई रहेको छ ।

ललितपुरका राजोपाध्याय देव व्राम्हणहरुको उपाकर्म गुठीसँग यस जात्राको नेपाल सम्वत ७५१ (वि.सं.१६८८) देखिको लिखित दस्तावेज छ । त्यस हिसाबले यस जात्राको इतिहास करीब चार सय वर्षको आसपास देखिएको छ ।

# गौरा पर्वको कार्यक्रममा नाराजुलुस

काठमाडौं । सोमबार काठमाडौंमा आयोजित गौरा पर्व विशेष कार्यक्रममा केही युवाहरुले नेताहरुको बिरोधमा नाराजुलुस गरेका छन् ।

गौरा पर्व विशेष कार्यक्रमलाई सम्बोधन गर्दै पूर्वप्रधानमन्त्री एवं नेपाली कांग्रेसका सभापति शेरबहादुर देउवाले गौरा पर्व बिथोल्नेहरुलाई कारबाही गर्न आग्रह गरेका छन् ।

नेताहरु गौरा पर्व मनाउन पुग्दा केही युवाहरुले नेताहरुको बिरोधमा नाराजुलुस गरेका थिए । सोही विषयमा बोल्दै उनले काठमाडौंमा आएर गौरा पर्वको कार्यक्रम बिथोल्नेहरुलाई काठमाडौंवासीले ठिक पार्नुपर्ने बताए ।

उनले बिरोध गर्नेहरु पछाडि कसको हात छ र कुन तत्व त्यसको पहिचान गरी कारबाही गर्नुपर्ने बताए । उनले नेपाली समाजमा नैतिकता हराउँदै गएको बताए ।

उनले भने, 'सुदूरपश्चिम र कर्णाली प्रदेशलगायत भारतको केही जिल्लाहरु आउनुभएको छ । आदरणीय दाजुभाई दिदिबहिनीहरु, यस्तै छ । यहाँ गौरा पर्व सुन्न आएकाहरु छन् । धेरै साथीहरु । देउडा खेल्न आएका छन् । गौरा पर्व सुन्न दिँदैनन् । न गौरा खेल्न दिन्छन् । यस्ता कार्यक्रम बिथोल्नेहरु यहाँ बसेका छन्। यसको पछाडि को छ, को तत्व छ, त्यसलाई यहाँका जनताले ठिक पार्नुपर्छ भन्ने मलाई विश्वास छ । आदरणीय दाजुभाई दिदिबहिनीहरु । अहिले यो गौरा पर्व जो छ, यो अत्यन्तै सुदूरपश्चिम, कर्णालीका जिल्लाहरुमा मनाइन्छ ।

काठमाडौं टुंडिखेलमा सोमबार आयोजना भएको गौरा पर्व कार्यक्रममा नाराबाजी र हुटिङ गरेको आरोपमा सरकारले दुई युवालाई पक्राउ गरेको छ । सो कार्यक्रममा संबोधन गर्न प्रधानमन्त्री केपी शर्मा ओली र नेपाली कांग्रेस सभापति शेरबहादुर देउवा पुगको थियो । कार्यक्रममा प्रधानमन्त्रीले सम्बोधन गर्ने क्रममा उनी विरुद्ध युवाहरुको भीडले नाराबाजी गरेको थियो ।

उक्त कार्यक्रममा नाराबाजी गरेर कार्यक्रम विथोल्न खोजेको आरोपमा दुई जनालाई पक्राउ गरिएको काठमाडौँ प्रहरीले जनाएको छ । उनीहरुलाई विभिन्न मिडियामा आएका भिडियो र फोटो हेरेर पक्राउ गरेको र अन्यको विषयमा अनुसन्धान भईरहेको प्रहरीको भनाइ छ ।

नाराबाजीका बीच प्रधानमन्त्री ओलीले सम्बोधन छोट्याएपछि सम्बोधनका लागि गएका कांग्रेस सभापति देउवाले युवाहरुलाई "लाज नभएका बदमास" भन्दै हर्कान खोजेका थिए ।

तर भीडले देउवा विरुद्ध पनि नाराबाजी गरेपछि उहाँले पनि सम्बोधन छोट्याएका थिए । देउवाले कार्यक्रम विथोल्न खोज्नेहरुलाई ठीक पार्ने चेतावनी दिएका थिए । नाराबाजीको २४ घण्टा नवित्दै युवाहरुलाई धरपकड गरेर सरकारले असहिष्णु व्यवहार देखाएको भन्दै सामाजिक सञ्जाल लगायत सर्वत्र आलोचना भइरहेको छ ।

# साफ यू२०: उपाधिका लागि नेपाल र बंगलादेश खेल्दै

काठमाडौं । साफ यू२० च्याम्पियनसिपको उपाधिका लागि आयोजक नेपालले आज एन्फा कम्प्लेक्समा हुने फाइनलमा बंगलादेशको सामना गर्दैछ । नेपाल उपाधिमा ह्याट्रिक गर्ने कोशिशमा रहनेछ भने बंगलादेश पहिलो पटक उपाधि जित्ने दाउमा हुनेछ । नेपाल उत्कृष्ट लयमा देखिएको छ । नेपाल अपराजित रहदै फाइनलमा पुगेको हो । नेपालले यसअघि सन् २०१५ मा नेपालमै भएको पहिलो र भुटानमा सन् २०१७ मा भएको दोस्रो संस्करण जितेको थियो ।

फाइनलको अघिल्लो दिन नेपालका कप्तान कुशल देउवाले टिम उपाधि जित्न तयार रहेको र तयारी पनि राम्रो रहेको प्री म्याच कन्फरेन्समा जानकारी गराए । फरवार्ड लाइनमा तालमेल मिल्न सकेको छैन भन्ने प्रश्नमा अन्य टिमले नेपाली टिमको विषयमा पनि अध्ययन गरेकोले केहि अप्ठयारो भएको बताए । तर उनले आफ्नो टिम र प्रत्येक खेलाडीमा पूर्ण विश्वास रहेको स्पष्ट पारे ।

नेपाल साफ च्याम्पियनसिपको तेस्रो पटक फाइनलमा पुगेको हो । यसअघि दुवै पटक नेपालले उपाधि जितेको थियो । समुह चरणको दुई खेलमा श्रीलंकालाई १-० ले र बंगलादेशलाई २-१ ले हराएको थियो । सेमिफाइनलमा भुटानलाई टाइब्रकेरमा हराएर नेपाली टिम फाइनल पुगेको हो ।

नेपालले जारी च्याम्पियनसिपको समुह चरणमा बंगलादेशलाई २-१ ले हराइसकेको छ । यसले पनि नेपाललाई केहि सहज हुन सक्छ । सबैभन्दा ठुलो फाइदा भने खेल हुने एन्फाको एस्ट्रो टर्फ मैदान नै हुनेछ । नेपालले यही मैदानमा प्रशिक्षण गरेको हो ।

फाइनल दशरथ रङ्गशालामा हुने भनिएपनि एन्फाले मैदानको अवस्थाका कारण सातदोबाटोमा नै फाइनल हुने निर्णय गरेको थियो । मैदानको फाइदा रहने भएपनि दर्शकको साथको कमी महसुस हुने प्रशिक्षक उर्जन श्रेष्ठले बताए । उनले टिमले पूर्ण क्षमता अनुसार खेल्न नसकेको पनि जिकिर गरे । उनले क्षमता अनुसार योजना अनुरूप खेलेमा जित निकाल्न सक्ने बताए ।

बंगलादेश भने समुह उपविजेता बन्दै सेमिफाइनलमा पुगेको हो । तर सेमिफाइनलमा तीन पटकको विजेता तथा डिफेन्डिङ च्याम्पियन भारतलाई टाइब्रेकरमा हराएर फाइनलको यात्रा तय गरेको हो । भारतलाई हराएर फाइनल पुगेको टिममा थप आत्मविश्वासी बनेको छ ।

प्रशिक्षक मारूफुलहलले भारतलाई हराएको पुरानो कुरा भएको र नेपालसँगको फाइनल खेल नयाँ खेल हुने र यो चुनौतीपुर्ण रहने बताए । उनले नेपालको बारेमा जानकारी रहेको र सोही अनुरुप खेल्ने बताए । बङ्गलादेशका कप्तान मोहमद असिफले नेपाली टिम उत्कृष्ट रहेको तथा नेपालको गतिसँग जानकार रहेको बताए । साथै उनले नेपाली टिममा क्वालिटीका खेलाडी रहेको र त्यसको अययन टिमले गरेको बताए ।

तर बंगलादेश कप्तान तथा पहिलो रोजाइका गोलकिपर मेहदी हसन घाइते छन् । उनको तत्काल शल्यक्रिया गर्नुपर्ने भएकोले फाइनल खेल गुमाउनेछन् । यसले टिमलाई केहि असर गर्न सक्छ । तर वैकल्पिक गोलकिपर मोहम्मद आशीफले भारत विरूद्ध टाइब्रेकरमा सानदार प्रदर्शन गरेका थिए । उनले भारतको दुई पेनाल्टी प्रहार रोकेका थिए। अब फाइनलमा गो पोष्ट सम्हाल्ने जिम्मेवारी उनलाई नै रहेको छ ।

बंगलादेश साफ च्याम्पियनसिपको तीन पटकको उपविजेता हो । सन् २०१७ मा राउन्ड रोबिनको आधारमा भएको च्याम्पियनसिपमा नेपाल र बंगलादेशको समान ९/९ अंक भएपनि हेड टु हेडको आधारमा नेपाल च्याम्पियन बनेको थियो । सन् २०१९ र सन २०२२ मा भने बंगलादेश फाइनलमा भारतसँग हारेको थियो।

छेटौं संस्करण सम्म आइपुग्दा नेपाल र बंगलादेशबीच चार पटक प्रतिस्पर्धा भएको छ । जहाँ नेपालले तीन खेल जित्दा एक खेलमा बराबरी नतिजा निकालेको थियो । यो अर्थ बंगलादेश विरूद्ध नेपाल अपराजित छ । साथै तीन संस्करणपछि फाइनलमा पुगेको कारण उपाधि जित्ने सुनौलो अबसर नेपाली युवा टिमलाई रहेको छ । फाइनल खेल बुधबार २:३० बजे एन्फा कम्प्लेक्समा हुनेछ ।

# बंगलादेशले पहिलो खेल स्कटल्यान्डसँग खेल्ने

एजेन्सी - स्कटल्यान्ड र बंगलादेशबीच महिला टि ट्वान्टी विश्वकप २०२४ को पहिलो खेल हुने भएको छ । अन्तर्राष्ट्रिय क्रिकेट परिषद(आईसिसी) ले सोमवार जारी गरेको खेल तालिका अनुसार ३ अक्टोबरबाट युएईमा नवौं संस्करणको महिला टी ट्वान्टी विश्वकप सुरुवात हुदैछ ।

बंगलादेशमा सुरक्षाको कारण देखाउदै प्रतियोगिता युएई सारिएको थियो । प्रतियोगिता युएईमा आयोजना हुने भएसँगै नयाँ खेलतालिका सार्वजनिक गरिएको थियो । जसमा समूह चरणका लागि दुबई र शारजाहका खेलहरू समान रूपमा विभाजित भएका थिए। अस्ट्रेलियाले समूह चरणका चारमध्ये तीन खेल शारजाहमा खेल्नेछ भने भारतले तीन खेल दुबईमा खेल्नेछ । साविक विजेता अस्ट्रेलियाले अक्टोबर ५ मा श्रीलंकासँग खेल्दै प्रतियोगिताको सुरुवात गर्नेछ । भारतले आफ्नो पहिलो खेलमा दुबईमा न्युजिल्याण्डविरुद्ध खेल्नेछ । भारतले ६ अक्टोबरमा दुबई ईन्टरनेसनल क्रिकेट स्टेडियममा पाकिस्तानको सामना गर्नेछ । पहिलो सेमिफाइनल १७ अक्टोबरमा दुबईमा आयोजना हुनेछ । १८ अक्टोबरमा शारजहाँमा दोस्रो सेमिफाइनल आयोजना हुनेछ । प्रतियोगिताको फाइनल २० अक्टोबर दुबईमा हुनेछ । सेमिफाइनल र फाइनल दुवैलाई रिजर्भ डे रहेको छ ।

प्रतियोगितामा १० टोलीको सहभागीता रहेको छ । सहभागी १० टोलीलाई दुई समूहमा विभाजन गरिएको छ । दुई समूहबाट शीर्ष दुई टोली सेमिफाइनलमा पुग्नेछन् । समूह 'ए' मा अस्ट्रेलिया, भारत, न्युजिल्यान्ड, पाकिस्तान र श्रीलंका छन् । समूह 'बी' मा दक्षिण अफ्रिका, इंग्ल्यान्ड, वेस्ट इन्डिज, बंगलादेश र स्कटल्याण्ड छन् ।

## प्रतिनिधिसभामो.......

नगर्नोस् ।'

'यो संसद् विश्वस्त होस्, हामी न निरपेक्ष प्रतिपक्ष बन्नेछौँ, न त निरीह प्रतिपक्ष । हामी रचनात्मक र सिर्जनात्मक प्रतिपक्ष बन्नेछौँ, यो सम्मानित संसद्मा जनताको आवाज बन्नेछौँ । आफू बस्न नपाएपछि कुर्सी नै भाँच्ने, प्रणाली नै भत्काउने शैली र चरित्र हाम्रो होइन'- उनले थपे- 'देशको हितमा राम्रो गर्नोस्, हामी साथ दिन्छौँ । संविधान निर्माणका बेला म प्रमुख प्रतिपक्षी दलकै नेता थिएँ तर कतिपय अवस्थामा मैले सत्ता पक्षबिचमै पनि संयोजनकारी भूमिका निर्वाह गरेँ । त्यो भूमिका यो संसद् र इतिहासमा लिपिबद्ध छ । शान्ति प्रक्रियाको तार्किक निरूपणमा सरकारको सकारात्मक भूमिकालाई मैले रोस्टमबाटै खुला प्रशंसा र समर्थन गरिसकेको छु।विश्वविद्यालयहरूमा सकारात्मक परिवर्तनका लागि अग्रसरता लिऊँ, हामी सँगै उभिन्छौँ । उद्यमशीलताका लागि आवश्यक नीतिगत र व्यवहारिक सुधारमा अग्रसरता लिऊँ, हामी साथ दिन्छौँ ।'

आज म केवल खबरदारी गर्न उपस्थित भएको उल्लेख गर्दै उनले भने- 'सरकारलाई मेरो विनम्र आग्रह छ, यो खबरदारीलाई कर्मकाण्ड नसम्झनुहोला । यही खबरदारी हामी सडकमा पनि गर्दैछौँ । सरकारका प्राथमिकताहरू विवेक होइन, अहङ्कार, इगो र स्वार्थ समूहको प्रभावले तय भइरहेका छन्, जनतासँग क्षमायाचनासहित सच्याउनोस् । विद्युत् प्राधिकरणमा जे गर्न खोज्नुभयो र खोज्दै हुनुहुन्छ, रोक्नोस् । भुटानी शरणार्थी काण्डलाई जता पुर्‍याउन र इमानदार प्रहरीलाई जसरी दण्डित गर्न खोज्दै हुनुहुन्छ, त्यो नगर्नोस् । विश्वविद्यालयमा मेरिटोक्रेसी मिच्दै हुनुहुन्छ, रोकिनोस् । गिरीबन्धुलगायतका नीतिगत भ्रष्टाचारहरूमा रफ्फु भर्दै हुनुहुन्छ, सुध्रिनोस् । हिजो आफैं प्रधानमन्त्री हुँदा बनाएका वैदेशिक श्रमका मापदण्ड मानवतस्करका लागि उल्ट्याउँदै हुनुहुन्छ, त्यता नलाग्नोस् । अझै पनि सुध्रिनोस् र सच्चिनोस् ।'

बिचौलियाहरूलाई रोस्टमबाटै सन्देश पठाउँदै अध्यक्ष प्रचण्डले भने- 'तपाईंहरूले रचना गरेको सरकार तपाईहरुको धेरै सेवा गर्न चाहन्छ तर यसको सामर्थ्य छैन । सामर्थ्य यसकारण छैन कि खबरदारी गर्न हामी प्रतिपक्ष छौं । सामर्थ्य यसकारण छैन कि सरकार र माफिया दुवै एक्सपोज्ड छन् । बिजुलीकै बिललाई टेस्ट-केस् माने हुन्छ । कुन हतियार चलाएन माफियाले ? आफूले सक्ने मिडिया चलाएन कि ? संसद्का समिति चलाएन कि ? डेडिकेटेड ट्रंकलाइनमाथि बोल्न थालेपछि सम्मानित संसद्मै सांसदको माइक काटिएन कि ? सरकार र अझ सरकारको शिर नै चलाएन कि ? यही रोस्टम चलाएन कि ? देखिने गरी सबै चलायो । तर, जनताको शक्ति हेर्नोस् ।'

'बिजुलीको आठ अर्ब बक्यौतामा समस्या भएर रोस्टममा उभिएका प्रधानमन्त्री अब फेसबुकबाटै भए पनि बाइस अर्ब भन्न थाल्नुभएको छ । विद्युत् प्राधिकरणको यही टेस्ट-केसले भन्छ, अब माफियाभन्दा जनता बलियो भइसकेको छ'- अन्त्यमा अध्यक्ष प्रचण्डले भने- 'त्यसैले साथीहरू अब यति, ओम्नी र गिरीबन्धुका पुराना सुमधुर सम्झनाबाट ब्यूँझिए हुन्छ । प्रतिपक्ष प्रतिबद्ध छ र जनता जागृत छ । अब सच्चिनु र सुध्रिनुमै सबैको भलो छ ।'

## कर्मचारीले....

आवेदन आएपनि ठूला र धेरै बजेट भएका कार्यक्रमको आवेदन आउँदैन । कर्मचारीले लुकाउँछन की, तलैबाट मिलाएर लैजान्छन मलाई थाहा छैन ।" जिसस प्रमुख थापाले भने । थानीय तहका प्रमुख र उपप्रमुखहरुले जिससलाई नटेर्ने गरेका उनको भनाइ छ । व्यंग्यगर्दै उनले भने, "ठूला ठूला काम गरिरहेको होला ! उहाँहरु बोलाएको बेला आउनु हुन्न र आएपनि कार्यक्रममा बस्न भ्याउनुहुन्न ।"

स्थानीय तहको न्यायिक समितिलाई १९ विषयका मुद्दा हेर्न पाउने व्यवस्था भएकोले विवाद सुल्झाउन उनले सुझाव दिए । "विवाद सुझाउने काम गर्नुस, बल्झाउने काम नगर्नुस ।" उनले भने । स्थानीय स्तरमा मेलमिलापकर्ताहरुको आवश्यकता र महत्व माथि प्रकाश पार्दै प्रमुख थापाले द्वन्द व्यवस्थापनमा सहजकर्ता परिचालनमा जोड दिए ।

प्राकृतिक श्रोत द्वन्द व्यवस्थापन केन्द्र नेपालका अध्यक्ष रामेश्वर बोहराले केन्द्रले स्थानीय तहलाई सहयोग गरिरहेको बताउँदैं स्थानीय तहले पनि द्वन्द व्यवस्थापनका लागि बजेटको व्यवस्था गर्नुपर्नेमा जोड दिए । स्थानीय तहले विवाद लुकाउने गरेको र त्यसले गर्दा झन् विवाद झन् जटिलता तर्फ जाने भन्दै विवाद लुकाउनमा भन्दा त्यसको समाधानमा केन्द्रीत बन्नपर्ने आवश्यकता औंल्याए ।

कार्यक्रममा केन्द्रका मध्य क्षेत्र संयोजक रिता मानन्धरले केन्द्रको गतिविधि प्रस्तुत गर्दै केन्द्रले बहुसरोकारवाला जल, जमिन र जंगलसँग सम्बन्धीत द्वन्द रुपान्तरण, मेलमिलाप अभियान र स्थानीय स्तरका अन्तरसम्बन्ध भएका घटनामा सहजीकरण गरिरहेको जानकारी गराइन ।

केन्द्रका वरिष्ठ कार्यक्रम अधिकृत दिपकराज भट्टले केन्द्र दिगो शान्तिका लागि उन्नत सम्बन्ध भन्ने मूल नाराका साथ शान्तिपूर्ण र सु-संस्कृत समाज निर्माणमा क्रियाशिल रहेको बताए ।

कार्यक्रममा केन्द्रको माकुरा सहजकर्ता शैलेश श्रेष्ठले चाँगुनारायण नगरपालिका-८ स्थित पात्ले सामुदायिक बन र खानेपानी समिति बीचको विवाद व्यवस्थापन बारेको अनुभव सुनाए ।

प्राकृतिक श्रोत द्वन्द व्यवस्थापन केन्द्र नेपाल मेलमिलाप परिषदबाट मेलमिलाप सम्बन्धी ऐन २०६८ को दफा २७ (ग) बमोजिम मेलमिलाप सम्बन्धी तालिम सञ्चालन गर्न र सोही ऐनको दफा २३ बमोजिम मेलमिलाप सम्बन्धी कार्य गर्न स्वीकृती पाएको सस्था भएको बताइएको छ ।

हालसम्म केन्द्रले ३ सय ६५ वटा बृहत खालका बहुसरोकारवाला द्वन्दहरु समाधान गरी समूदायमा शान्ति स्थापना गर्न टेवा पुर्याएको बैठकमा जानकारी गराइएको छ । भक्तपुरमा केन्द्रले ९ वटा ठूला विवाद समाधान गरेको र अहिले एउटा समाधानको चरणमा रहेको समेत केन्द्रकी कोषाध्यक्ष कमला पोखरेलले जनाएकी छन् ।

## जनतालाई......

तथा भौतिक पूर्वाधारहरूको उद्घाटन समारोहलाई सम्बोधन गर्दै प्रधानमन्त्री ओलीले उक्त कुरा बताउनुभएको हो ।

सो अवसरमा प्रधानमन्त्री ओलीले नेपाल प्रहरीको लामो इतिहास र अनुभव रहेको चर्चा गर्दै नेपाल प्रहरीले समाजमा शान्ति सुरक्षा तथा अमन चयन कायम गर्न एवम् अपराध अनुसन्धान तथा रोकथाममा निर्वाह गरेको भूमिका प्रशंसनीय रहेको बताउनुभयो । आधुनिक प्रविधिको प्रयोग गर्दै आफ्ना कार्यहरू दक्षताका साथ सम्पन्न गर्न समेत नेपाल प्रहरी सक्षम रहेको उहाँले उल्लेख गर्नुभयो ।

प्रधानमन्त्री ओलीले राज्यको शक्तिको दुरूपयोग गरेर निर्दोषलाई दोषी करार गर्ने जस्ता क्रियाकलापहरू आपराधिक क्रियाकलाप भएको बताउँदै संविधान र कानून बमोजिम नेपाल प्रहरी आफ्नो कर्तव्य पालना गर्न ढुक्क साथ आगाडि बढ्नुपर्ने बताउनुभयो । समाजमा अपराध हुन नदिन र आपराधिक मानसिकता फैलिन नदिन कसैले अपराध गराउन खोजेको छ भने त्यसलाई पहिलेनै पत्ता लगाएर नियन्त्रण एवम् अनुसन्धान गर्न धैरै महत्वपूर्ण भएको उल्लेख गर्दै अपराध रोकथाममा पुरानो तरिकाले मात्र नभई नयाँ कार्यशैलीको विकास गर्दै सुसज्जित बनाई अनुसन्धान भन्दा अगाडिको अनुसन्धान गर्न जरूरी रहेको उहाँले बताउनुभयो । समाजमा शान्ति सुरक्षा खलबलाउने एवम् देशलाई अझ अराजकता तर्फ लैजान खोज्ने विरूद्ध नेपाल प्रहरीले सतर्कता अपनाई काम गर्नुपर्ने बताउँदै आधुनिक प्रविधिको दुरूप्रयोगबाट हुने अपराध नियन्त्रणमा समेत अझ सक्रिय हुनुपर्ने उहाँले बताउनुभयो ।

समारोहमा गृहमन्त्री रमेश लेखकले सरकारले नागरिकलाई सेवा प्रदान गर्ने क्रममा संविधान र कानूनको कार्यान्वयन गर्ने अंग मध्येको नेपाल प्रहरी प्रमुख अंग रहेको बताउँदै मुलुकमा प्रचलित कानून कार्यान्वयन एवम् नागरिकले प्राप्त गर्ने प्रहरी सेवामा नवनिर्मित भवनले महत्वपूर्ण भूमिका निर्वाह गर्ने बताउनुभयो । मुलुकमा दिगो शान्ति, सुशासन, विकास र सम्वृद्धिको लक्ष्यसम्म देशलाई पुर्‍याउनको लागि सरकार अगाडि बढेको चर्चा गर्दै सरकारले जनतालाई प्रदान गर्ने सेवामा कुनै किसिमको कमी कमजोरी नहोस् एवम् जनताले विधिको शासन तथा शान्ति सुव्यवस्थाको अनुभूतिका साथै सरकारको लक्ष्य एवम् उद्देश्य अनुरूप नेपाल प्रहरीले कार्य गर्नुपर्ने बताउनुभयो । नेपाल प्रहरीले सीमित स्रोतसाधनका वावजूद पनि उल्लेखनीय कार्य गर्दै आइरहेको चर्चा गर्दै जनताका मुद्दालाई प्राथमिकतामा राखेर उच्च मनोबलका साथ काम गर्न सबै प्रहरी कर्मचारीहरूलाई उहाँले अग्रह समेत गर्नुभयो ।

सो अवसरमा गृहसचिव एकनारायण अर्यालले नवनिर्मित भवनबाट अझ प्रभावकारी सेवा प्रवाह हुने र सेवाग्राही लाभान्वित हुने अपेक्षा रहेको बताउनुभयो । नेपाल प्रहरीलाई समयानुकुल व्यवसायिक एवम् गतिशिल बनाउँदै लैजाने सरकारको नीति अनुरूप नवनिर्मित भवनलाई महत्वपूर्ण उपलब्धीको रूपमा लिएको बताउँदै यसले प्रहरी कर्मचारीको उत्प्रेरणा र मनोबलमात्र अभिवृद्धि नगरी नेपाल प्रहरीका काम कारवाहीलाई नागरिकमैत्री, व्यवसायिक एवम् परिष्कृत बनाउँदै सेवाग्राहीले समेत शान्ति सुरक्षा र अमन चयनको महसुस गरी प्रत्यक्ष रूपमा नागरिकलाई सहज, सुलभ र पारदर्शी सेवा दिनसक्ने विश्वास व्यक्त गर्नुभयो ।

समारोहमा प्रहरी महानिरीक्षक बसन्त बहादुर कुँवरले धन्यवाद ज्ञापन व्यक्त गर्दै नेपाल प्रहरी स्थापनकालदेखि नै समाजमा हुने हर तरहका अपराधका घटना रोकथाम, नियन्त्रण र अनुसन्धान एवम् शान्ति सुरक्षा कायम राख्ने सन्दर्भमा राज्यको प्रमुख अंगको रूपमा कार्यसम्पादन गर्दै आइरहेको बताउनुभयो । समाजको परिवर्तनको गति र नागरिकको चाहनालाई आत्मसाथ गर्दै प्रहरीको सेवा पनि थप जनमुखी, परिष्कृत, उत्तरदायी, सेवामुखी र सर्वस्वीकार्य बनाउन नेपाल प्रहरी प्रधान कार्यालय कटिवद्ध रहेको र समयसापेक्ष सांगठनिक विकास तथा प्रहरी सेवामा प्रभावकारीता वृद्धि गर्दै आन्तरिक सुदृढिकरण र शुद्धिकरण गर्ने उद्देश्य कार्यान्वयनलाई प्रमुख प्राथमिकतामा राखिएको उहाँले उल्लेख गर्नुभयो ।

प्रहरी महानिरीक्षक कुँवरले प्रहरीको भौतिक संरचनाहरू व्यवस्थित र गुणस्तरीय हुँदा यसले कर्मचारीको स्वास्थ्य र मनोबलमा सकारात्मक प्रभाव पर्ने तथा स्वच्छ कार्यमैत्री वातावरण निर्माण भई आम नागरिकमा हुने सेवा प्रवाह थप गुणस्तरीय एवम् प्रभावकारी बनाउन सहयोग पुग्ने बताउनुभयो । नवनिर्मित सुविधा सम्पन्न भवनले राज्यको प्रमुख सुरक्षा निकायको दरिलो भौतिक उपस्थिति मात्र होइन, नेपाल प्रहरीका काम कारवाहीलाई थप नागरिकमैत्री एवम् परिष्कृत बनाउन समेत महत्वपूर्ण भूमिका निर्वाह हुने विश्वास उहाँले व्यक्त गर्नुभयो । नयाँ भवनबाट सम्पादन हुने प्रहरी सेवा प्रवाह पनि थप उर्जामय, नागरिकमैत्री, नविन सोंच र उच्चस्तरको हुनुपर्ने र सम्पादन हुने कार्यशैलीले सेवा प्रवाहमा स्तरवृद्धिको सांगठनिक प्रतिबिम्बित गर्नुपर्नेमा उहाँले जोड दिनुभयो ।

काठमाडौं उपत्यका प्रहरी कार्यालयका प्रहरी नायव महानिरीक्षक कृष्णहरि शर्माले स्वागत मन्तव्य व्यक्त गर्नुभएको उक्त कार्यक्रममा प्रहरी वरिष्ठ उपरीक्षक ई. राम कुमार चौधरीले भवन निर्माण सम्बन्धी प्रतिवेदन प्रस्तुत गर्नुभएको थियो । नेपाल सरकारको नियमित बजेटबाट कुल १ अर्ब २६ करोड ७४ लाख ९६ हजार ९९ रूपैयाँ ८१ पैसाको लागतमा उक्त भवनहरू निर्माण कार्य सम्पन्न भएको हो ।

कार्यक्रममा प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालयका मुख्य सल्लाहकार विष्णु प्रसाद रिमाल, आर्थिक/ विकास सल्लाहकार युवराज खतिवडा, महान्यायाधिवक्ता रमेश वडाल, प्रतिनिधि सभा सदस्य, नेपाल सरकारका पूर्व मन्त्री एवम् अवकाश प्राप्त प्रहरी महानिरीक्षक ध्रुब बहादुर प्रधान, मुख्य सचिव लिलादेवी गड्तौला, कायममुकायम प्रधानसेनापति अशोकराज सिग्देल, प्रधानमन्त्रीज्यूको प्रमुख स्वकीय सचिव, अख्तियार दुरूपयोग अनुसन्धान आयोगका आयुक्त, सशस्त्र प्रहरी महानिरीक्षक, राष्ट्रिय अनुसन्धान विभागका प्रमुख, अवकाश प्राप्त प्रहरी महानिरीक्षकहरू, प्रहरी अतिरिक्त महानिरीक्षकहरू, सहसचिवहरू, जिल्ला न्यायाधिश, काठमाडौंका प्रमुख जिल्ला अधिकारी, जिल्ला न्यायाधिवक्ता, प्रहरी नायव महानिरीक्षकहरू, वरिष्ठ प्रहरी अधिकृतहरू, संचारकर्मीहरू एवम् प्रहरी अधिकृत तथा जवानहरूको उपस्थिति रहेको थियो ।

## भ्रष्टाचार.....

अधिकार प्रयोग गर्दै केदारनाथको शिर डोलेश्वर घोषणा भएको दिन भदौं ६ गते स्थानीय पर्व बिदाको प्रचन लगाएको र यसले यो क्षेत्रको प्रचारप्रसारमा मद्दत मिल्ने उनले बिश्वास व्यक्त गरे । सो अवसरमा नगर प्रमुख थापाकी पत्नी अम्बिका थापा पनि उपस्थित थिइन् ।

कार्यक्रममा सूर्यविनायक नगरपालिकाकी उपप्रमुख सरिता तिम्सिना भट्टराईले श्रावणी मेला र डोलेश्वर मन्दिरका कारण स्थानीय उत्पादनले बजार पाएको र आम्दानीको श्रोत बढेको बताइन । कार्यक्रममा प्रमुख जिल्ला अधिकारी रोशनी कुमारी श्रेष्ठले धेरै दान दिने व्यक्तिलाई सम्मान गर्दा समाजमा विभेद उत्पन्न हुनसक्ने तर्फ सचेत गराइन । दान गर्न नसक्नेको मनोविज्ञान बुझी दानलाई गोप्य राख्नुपर्ने तथा करकाप र देखासेखी रहित बनाउनुपर्ने उनले बताइन ।

कार्यक्रममा वडा नम्बर ८ का वडाध्यक्ष पुष्पराज बस्नेतले ३८ दिनसम्म चलेको मेला शान्तिपूर्ण रुपमा सम्पन्न भएको जानकारी गराए । स्थानीयले मेलाप्रति अपनत्व लिएर स्वयंसेवा गरेका र मेलालाई भब्य बनाएका उनले बताए ।

डोलेश्वर महादेव संरक्षण तथा विकास समितिका अध्यक्ष धर्मराज बस्नेतको अध्यक्षतामा सम्पन्न कार्यक्रमको संचालन महासचिव हरिशरण बस्नेतले गरेका थिए । कार्यक्रममा उपाध्यक्ष रामेश्वर बोहोराले स्वागत मन्तब्य राखेका र कोषाध्यक्ष रत्नप्रसाद छुकांले मेलाको आम्दानी खर्च सार्वजनिक गरेका सचिव कविराम थापाले बताएका छन् । कार्यक्रममा राष्ट्रपति चुरे संरक्षणकी सदस्य, इन्द्रबक्स गणका गणपति मोहनबहादुर थापा, जगाती वृत्तकी डिएसपी दिप्ती कार्कीलगायतको आतिथ्यता रहेको थियो । कार्यक्रम अघि प्रमुख अतिथि लगायत अतिथिहरुले डोलेश्वर महादेवको पूजाअर्चना गरेका थिए ।

बिहीवार डोलेश्वरको चारै ढोका खुला गरिनुका साथै सबै श्रद्धलुलाई गर्भगृहमै प्रवेश गरी पूजाअर्चना गर्नसक्ने व्यवस्था मिलाइएको थियो ।

## सिद्धिदासको.....

आफूले मन्त्रालय सम्हाल्दा भाषा र संस्कृति विकासको निम्ति सकेको पहल गरेर बजेटसमेतको व्यवस्था गरिदिएको जानकारी दिए ।

भाषासेवी उमेश स्थापितले उपलब्ध बजेटबाट भाषिक पाठ्यपुस्तक निर्माण, शब्दकोष प्रकाशन र यस्ता कामको लागि आवश्यक कर्मचारी जुटाउने काम भइरहेको जानकारी दिए । डा. पुष्प राजकर्णिकारले बजेट कार्यान्वयनको चरणमा रहेकोले यसबेला विशेष रुपले सचेत हुनुपर्ने बताउँदै कर्मचारीतन्त्रको चंगुल निकै खतरनाक रहने भएकोले यसप्रति सबै सचेत हुनुपर्ने उनको भनाइ थियो ।

अर्का वक्ता दिपक तुलाधरले भाषा आयोग सबैको साझा भएकोले सबै भाषाको उत्थानमा आयोग लाग्नुपर्ने बताउँदै बिरगंजमा भोजपुरी भाषाको प्रवर्द्धन हुनुपर्ने विषय पनि औंल्याए ।

स्रोत : नेपालभाषा समाचार केन्द्र

## समयमा.....

साल श्रावणदेखि असोज महिना भित्र व्यवसाय दर्ता नविकरण गर्न आएमा बक्यौता करमा लाग्ने सम्पूर्ण जरिवाना छुट गरिएको छ ।

नगरपालिकाले सम्पत्तिकरमा जस्तै व्यवसाय करमा पनि २०८१ साल श्रावणदेखि असोज महिना भित्र व्यवसाय कर बुझाएमा आ.ब. २०८१/०८२ मा लाग्ने व्यवसाय करमा मात्र १० प्रतिशत छुट गरिएको छ ।

नगरपालिकाले नयाँ व्यवसाय दर्तामा समेत १० प्रतिशत छुटको प्रावधान लागु हुने भएकोले दर्ता नभएका व्यवसाय असोज मसान्तभित्र सम्बन्धित वडा कार्यालयमा गई दर्ता गर्न आग्रह गरेको छ ।

नगरपालिकाले घरबहाल करमा समेत विशेष छुटको व्यवस्था गरेको छ । जसअनुसार २०८१ श्रावणदेखि असोज महिना भित्रमा आ.व. २०८१/०८२ मा लाग्ने सम्पूर्ण घरबहाल कर एकमुष्ट अग्रिम बुझाउने करदातालाई चालु आ.ब. मा लाग्ने बहाल करमा मात्र १० प्रतिशत छुट दिने व्यवस्था गरेको छ ।

नगरपालिकाले करदाताको चाहना अनुरुप आवासिय र व्यवसायिक प्रयोजनका लागि छुट्टाछुट्टै बहालकरको दर लागु गरेको छ । नगरपालिकाले आवासीय प्रयोजनका लागि बहालमा लगाएको अवस्थामा ५ प्रतिशत र व्यवसायिक प्रयोजनका लागि दिईएको बहालमा १० प्रतिशत कर लागु गरेको छ ।

नगरपालिकाको आन्तरिक आम्दानीको प्रमुख स्रोतले जनताले तिर्ने विभिन्न कर भएकाले करदाताको चाहना र उनीहरुलाई थप सुविधा दिई कर तिर्न प्रोत्साहित गर्ने उद्देश्यले करमा विभिन्न छुटको योजना ल्याएको नगरप्रमुख सुरेन्द्र श्रेष्ठले जानकारी दिए ।

उनले बहालकरमा धेरै जनगुनासो आएको र करको दर बढी भएको भन्ने गुनासोलाई सम्बोधन गर्न बहालकरमा दुई थरी करको दर लागु गरिएको जानकारी दिए । नगरप्रमुख श्रेष्ठले नगरपालिकाले ल्याएको छुटको सुविधा लिई मौकाको फाइदा उठाउन आग्रह समेत गरेका छन् ।

"समयमा कर तिर्नु सबैको दायित्व हो । ढिलो चाँडो कर तिर्नै पर्छ । करदातालाई सम्मान गर्नु राज्यको पनि दायित्व हो । यसै अनुरुप करदाताको सम्मानको लागि पनि छुटको व्यवस्था ल्याएका हौं," उनले भने, "समयमा तिर्ने करदाता र ढिला तिर्ने करदातालाई एउटै सुविधा र व्यवस्था न्यायोचित नभएकाले पनि समयमा तिर्ने करदातालाई प्रोत्साहित गर्न छुटको व्यवस्था गरेका हौं ।"

इमेल: thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# "नरसिंहा: अवतार" मा कलाकारहरुको लाइनअप पुरा




काठमाडौं । क्रिएटिभ सिने आर्टको प्रस्तुतिमा निर्माण हुन लागेको चलचित्र 'नरसिंहा: अवतार' मा कलाकारहरूको रोचक लाइनअप बनेको छ। एक्सन तथा सामाजिक विषयवस्तुमा बन्न लागेको यो चलचित्रको लागि ६ जना पात्रहरू चयन भइसकेको जनाएको छ ।

निर्देशक दिवाकर भट्टराईको निर्देशनमा निर्माण हुन लागेको चलचित्रमा नायक राजेश हमाल, नीति शाह, सरोज खनाल, प्रशान्त ताम्राकार, नीर शाह, सनिशा भट्टराई र दीपा शाही अनुबन्धित भइसकेका छन् ।

कलाकाको बलियो लाइनअप तयार भएको फिल्ममा नायक राज कटुवाल पनि जोडिएका छन् । कटुवाल शुक्रबार अनुबन्धित भएका हुन् । उनी 'नरसिंहा: अवतार' मा जोडिएसँगै चलचित्रका मुख्य कलाकारहरूको लाइनअप पूरा भएको छ ।

निर्माणपक्षले यो चलचित्रमा कलाकारहरुको के कस्तो भूमिका छ भन्ने विषयमा कुनै जानकारी खुलाइएको छैनन् । चलचित्रको मुख्य भूमिकामा राजलाई अनुबन्धित गराएसँगै निर्देशक भट्टराईले यस चलचित्रबाट एक राम्रो नायकको जन्म हुने आशा व्यक्त गरे ।

कटुवालले यो चलचित्रमा जोडिन पाउँदा खुसी लागेको विचार व्यक्त गरे । "आफूले काम गर्दै आएको क्षेत्रमा कुनै पनि चलचित्रमा जोडिन पाउनु नै एउटा कलाकारकोलागि महत्त्वपूर्ण कुरा हो, उनले भने, "निर्देशकले मलाई ठूलो जिम्मेवारी दिनुभएको छ, साथै म आफैंले समेत धेरै मेहनत गर्नु पर्ने देखिएको छ ।"

यसै चलचित्रबाट आठ वर्षपछि नायक हमालले कम्ब्याक गर्दैछन् । धेरै समय पछि हमाल फिल्ममा फर्किने खबरले यतिबेला नेपाली चलचित्र जगत तातेको छ । जस कारण यो चलचित्र दर्शकको लागि प्रतीक्षित बन्ने आंकलन गरिएको छ ।

यता, क्याप्टेनपछि निर्देशक भट्टराईको चलचित्रमा अभिनेता सरोजले अभिनय गर्न लागेका छन् भने हमाल र खनाल ३० वर्षपछि सँगै एउटै फिल्ममा देखिन लागेका हुन् । उनीहरूले सन् १९९४ सेप्टेम्बर २७ मा रिलिज भएको फिल्म 'सडक'मा सँगै काम गरेका थिए । तीर्थ थापाले निर्देशन गरेको उक्त फिल्मपछि यी दुईले सँगै काम गरेका छैनन् ।

चलचित्र यही भदौको अन्तिम साताबाट छायाङ्कनमा जाने तयारीमा रहेको छ । चलचित्रको लगानी तीन करोडभन्दा माथि हुने बताइएको छ । निर्देशक भट्टराईको अर्को फिल्म 'मायावी' प्रदर्शनको तयारीमा छ । निर्देशक भट्टराईका अनुसार मायावीको केही दिनमै प्रदर्शन मिति तय गरिने छ ।

# मिलाप तीज उत्सवको तेस्रो संस्करण सम्पन्न




काठमाडौं । हरेका वर्ष मिलाप फाउण्डेशनको आयोजनामा हुँदै आएको मिलाप तीज उत्सवको तेस्रो संस्करण काठमाडौंमा सम्पन्न भएको छ । 'भाषा, साहित्य, कला संस्कृति र मौलिकताको संरक्षण तथा सम्वर्द्धन गरौं' भन्ने मूल नाराका साथ उक्त उत्सव सम्पन्न भएको थियो ।

कार्यक्रममा यमकुमारी कला सम्मान २०८१ बाट महिला द्वन्द्व निर्देशक किरण दाहाल, साहित्यकार राधा भण्डारी, रंग पत्रकार सवी कार्की खड्कालाई सम्मान गरिएको थियो । त्यस्तै मेकअप आर्टिष्ट सञ्जु ढकाल, गायिका सुमी पराजुली, गायिका सरिता थापामगर (तोककुमारी मगर) र ट्याटु आर्टिष्ट सुनिता कुँवर पनि मिलाप सम्मानबाट सम्मानित भएकी थिइन् ।

समारोहमा गीता अधिकारीको तीज गीत 'बजाउँदै चुरा'का सर्जक स्रष्टालाई मायाको चिनोसमेत प्रदान गरिएको थियो । गायिका सारिका घिमिरे, संगीतकार योगेश काजी शाह, कलाकार रिमोना लोहार, मिक्सिङ/माष्टरिङ मनोज परियार, निर्देशक/कलाकार प्रदीप रसाइली, कलाकार मुना भुर्तेललगायतलाई मायाको चिनो प्रदान गरिएको थियो । कार्यक्रममा बोल्दै तीजलाई परम्परागत भन्दा सिर्जनात्मक रूपमा मनाउनुपर्नेमा गायिका वन्दनाले जोड दिइन् । सञ्चारकर्मी कमला जोशी र वुमेन्स एरा मिडिया ग्रुपकी अध्यक्ष प्रतिमा राईले तीजलाई भडकिलो भन्दा सभ्य रूपमा मनाउनुपर्ने धारणा राखिन् । यसैगरी सम्मानित व्यक्तित्वकातर्फबाट साहित्यकार राधा भण्डारीले तीजको महत्व र यसको मौलिकता बारे प्रकाश पारेकी थिइन् । विगत १४ वर्षदेखि निरन्तर प्रकाशन हुँदै आएको मिलाप मासिकले तीज पर्वलाई उत्सवका रूपमा मनाउँदै समाजमा विशेष योगदान दिने महिलाहरुलाई सम्मान गर्ने गरेको मिलाप मासिककी कार्यकारी सम्पादक तथा मिलाप फाउण्डेशनकी अध्यक्ष गीता अधिकारीले जानकारी दिइन् ।

# अक्षय कुमार 'स्त्री ३' मा खलनायक बन्दै !




काठमाडौं । बलिउड चलचित्र 'स्त्री २' ले भारतीय बक्स अफिसमा २ सातामा ५०० करोड संकलन गर्न सफल बनेको छ । राम्रो कमाइ गर्ने यो पहिलो हरर कमेडी चलचित्र हो । अमर कौशिक निर्देशित चलचित्रमा अक्षय कुमारको केमियोको पनि चर्चा भइरहेको छ ।

यो चलचित्रको खास पक्ष के छ भने मुख्य कलाकारले मात्रै सबैको ध्यान तानिरहेका छैनन्, केमियो पनि दर्शकमाझ उत्तिकै चर्चित छन् । यसमा अक्षयको केमियोले चर्चा बटुलेको छ । हालैको एक अन्तर्वार्तामा पटकथाकार निरेन भट्टले अक्षयको चरित्रमा आधारित 'स्ट्यान्डअलोन' फिल्मको सम्भावनाबारे कुरा गरे । अक्षयको क्यारेक्टर र स्त्री युनिभर्सले उनलाई आगामी सिक्वेलमा अझ मुख्य रुपमा पेश गर्ने योजना बनाएको छ कि भनेर सोधिएको थियो ।

जवाफमा लेखक भट्टले इन्डिया टुडेसँग भने, 'ढुक्क हुनुहोस्, हामीसँग ब्रह्माण्डका हरेक पात्रका लागि योजना छन् । तीमध्ये सबैभन्दा सानो र ठूलो पनि ।' उनले अक्षयको रोल भविष्यमा अझ महत्वपूर्ण भूमिकामा परिणत हुनसक्ने बताए ।

निरेनले थपे, 'ब्रह्माण्डका सबै पात्रले एकअर्कालाई खोज्छन् । एकअर्कासँग कुनै न कुनै रूपमा अन्तरक्रिया गर्छन् । हामी यस ब्रह्माण्डमा धेरै फिल्म बनाउन सक्छौं र यस्तो एकल फिल्म कसले चाहँदैन ? हाम्रो काम भनेको उत्कृष्ट काम गर्ने र उत्कृष्ट कथा फेला पार्नु हो ।' 'स्त्री २' ले रिलिज भएदेखि नै बक्स अफिसमा आँधी ल्याइरहेको छ । चलचित्रमा श्रद्धा कपुर, अपारशक्ति खुराना, पंकज त्रिपाठी र अभिषेक बनर्जीको पनि महत्वपूर्ण भूमिका छ ।

# चिनियाँ हल दृष्टिविहीन दर्शक मैत्री बन्दै

काठमाडौं । यस वर्षको गर्मीयाममा चीनमा ब्लकबस्टर चलचित्रको रिलिज शैली अघिपछि भन्दा भिन्न देखियो । यी चलचित्रलाई नेत्रहीन र दृष्टिविहीन दर्शकले पनि महसुस गर्न सके । चिनियाँ हलले त्यस्ता दर्शकलाई अडियो विवरण समेत उपलब्ध गराएका थिए ।

कसरी चिनियाँ चलचित्र उद्योगले सबैखाले दर्शकको लागि पहुँच स्थापित गरेका छन् भन्ने संकेत हो यो । एउटा अलग साउण्ड-ट्र्याक जुन चलचित्र चलेसँगै बज्छ । यस्तो खाले अडियो शैलीलाई चीनमा 'बाधारहित चलचित्र' भनेर पनि चिनिन्छ । दृष्टिविहीन दर्शकका लागि चलचित्र बुझ्ने र जान्ने यो गतिलो उपाय हो ।

यस्तो सेवालाई त्यस्ता मानिसले हेडफोन र ह्यान्डसेटबाट सुन्न सक्छन् । यसले दृष्टिविहीन व्यक्तिलाई दृश्यका बारे राम्रोसँग कल्पना गर्न र गैरमौखिक संकेत बुझ्न मद्दत गर्छ, जसले उनीहरुको फिल्म हेर्ने आनन्द समृद्ध बन्छ ।

चीनमा अनुमानित एक करोड १७ लाख दृष्टिविहीन छन् । अहिलेसम्म चिनियाँ सिनेमा हलमा अडियो विवरण उपलब्ध थिएनन् ।

आमरुपमा धेरैजसो फिल्म स्टुडियोमा या त दृष्टिविहीन व्यक्तिको आवश्यकताको बारेमा चेतनाको कमी थियो वा अडियो विवरणको ट्र्याक सिर्जना गर्नेतर्फ लगानी गर्न इच्छुक थिएनन् । यस्ता 'बाधारहित चलचित्र' केही आधुनिक हलमा मात्र सीमित थिए ।

यो परिवर्तनको थालनीसँगै गर्मीयाममा रिलिज भएका ठूला चलचित्रले दर्शकलाई अडियो सुविधा दिन थालेको छ । लोकप्रिय कमिक श्रृंखलामा आधारित काल्पनिक एक्सन ब्लकबस्टर चलचित्र 'द ट्राभलर'का निर्माताले बेइजिङ, सांघाई, निङ्बो, सुझाउ, चोङ्क्चिङ लगायत चीनका ७४ हलमा 'बाधारहित चलचित्र'को अडियो संस्करण उपलब्ध गराएका थिए ।

त्यसैगरी, डार्क कमेडी चलचित्र 'सक्सेसर'ले समेत बाधारहित संस्करण रिलिज गर्‍यो । जुलाईमा प्रिमियर हुनुअघि नै यो चलचित्रले २.२ बिलियन युआन (३०० मिलियन डलर) कमाएको थियो ।

यद्यपि, यो सुविधा चीनमा अझै अपेक्षाकृतरुपमा नयाँ छ । अडियो विवरणले सरकार, कन्टेन्ट निर्माता र स्ट्रिमिङ प्लाटफर्मबाट बढ्दो ध्यान प्राप्त गरिरहेको छ । चीनको १४ औं पञ्चवर्षीय योजनाले अपाङ्गता भएका व्यक्तिका लागि बाधारहित चलचित्रसहित 'बाधामुक्त'को सेवाको उपलब्धतालाई फराकिलो बनाउने लक्ष्य राखेको छ ।

टिन्सेन्ट भिडियो र योउकुलगायतका स्ट्रिमिङ प्लाटफर्मले सयौं लोकप्रिय चलचित्र र टिभी श्रृंखलाको अडियो विवरण उपलब्ध गराउने 'बाधारहित च्यानल' सुरु गर्ने योजनाको घोषणा गरेका छन् । दृष्टिविहीन र दृष्टिविहीन चलचित्रका प्रशंसकले यस्तो परिवर्तनलाई स्वागत गरेका छन् ।
















प्रकाशक/कार्यकारी सम्पादक: दीपक श्रेष्ठ, सम्पादक: दीपिका श्रेष्ठ, व्यवस्थापक: दिवस श्रेष्ठ, कार्यालय: सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोन: ६६३३६५२, ९८५११०२२७३,
मुद्रण: धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ०८ ने.सं. ११४४ भाद्र १९ गते बुधबार, २०८१ 04 Sept. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## दुई कम्यूनिष्टबीच संसदमा जुहारी !



काठमाडौं । नेकपा एमाले र नेकपा (माओवादी केन्द्र) दुवै सैद्धान्तिक हिसाबले कम्युनिस्ट विचारधारा बोक्ने दल हुन् । साथै यिनीहरूले निर्वाचनमा तालमेल गर्ने लगायत आन्दोलनका क्रममा समेत संयुक्त मोर्चा बनाएर सहकार्य गर्ने देखि पार्टी एकता पुनः विभाजनको चक्र पूरा गरेका मात्र छैनन्, सत्तामा पनि सहकार्य गर्दै पटक-पटक राज्यभोग गरिसकेका छन् ।

तर केही समय अगाडिसम्म सत्ता साझेदार रहेको यी दुई पार्टीहरुबीच तीक्तता बढेको पाइएको छ । मुख्यतः नेकपा एमालेका अध्यक्ष केपी शर्मा ओलीले नेकपा माओवादीसंग सम्वन्ध तोड्दै नेपाली कांग्रसका सभापति देउवासँग सत्तामा आधा आधा समय नेतृत्व सम्हाल्ने शर्तमा हात मिलाएपछि नेकपा माओवादी नेकपा एमाले प्रति बडी आक्रमक देखिएकोछ । विगतमा नेकपा माओवादी अध्यक्ष पुष्पकमल दहाल स्वयंले पनि एमालेको साथ छोडेर नेपाली कांग्रेससँग सत्ता साझेदार गरको थियो । यसरी पुनः संसद्का २ ठूला दल नेपाली कांग्रेस र नेकपा एमाले मिलेपछि एमाले-माओवादी संसददेखि सामाजिक सञ्जालसम्म एक अर्का माथि आरोप प्रत्यारोपमा खुलेर लागेका छन् । गत भदौ ११ गते माओवादी अध्यक्ष प्रचण्डले संसद्मा सम्बोधन गर्ने क्रममा 'नक्कली भुटानी शरणार्थी काण्डलाई सामसुम पार्न र अरू अपराधीलाई जोगाउन कांग्रेस-एमाले मिल्नु सामान्य घटना नभएको आक्रमक अभिव्यक्ति दिएका थिए ।

साथै उनले श्रीलंका र बंगलादेशको जस्तै हालत हुन सक्ने चेतावनीसमेत दिएका थिए । 'केही दिनमै सरकार सत्ता समूहका पक्षमा जसरी खुला रूपमा उभियो, त्यसका कारण जनतामा निराशा र आक्रोशको आगो ज्यामितीय रूपमा बढ्दैछ,' उनले भने, 'त्यसका झिल्का जताततै देखिँदैछन् । त्यो आगो कतै लोकतन्त्रविरुद्ध प्रयोग होला कि भन्ने हाम्रो चिन्ता छ ।'

प्रचण्डको कडा अभिव्यक्तिकै कारण अहिले प्रतिनिधिसभा बैठकमा दुवै दल एकअर्काप्रति थप आक्रामक देखिएका छन् । त्यस पछिका प्रतिनिधि सभाको बैठकमा एमाले सांसद योगेश भट्टराईले विपक्षी दलका

बाँकी पेज ७ मा

## देशभक्तहरुको मोर्चा आवश्यक : डा. श्रेष्ठ

काठमाडौं । नागरिक अगुवा डा. महेश मान श्रेष्ठले देशभक्तहरुको संयुक्त मोर्चा बनाउनुपर्नेमा जोड दिनुभएको छ । नेपाली कांग्रेस, नेकपा एमाले, माओवादी, समाजवादी लगायतको दलले देशभक्तहरुको संयुक्त मोर्चा बनाउनुपर्ने सुझाउनु भएको हो । नेवाः ग्वहालि पुचः टोखाले गरेको कार्यक्रममा नेपाललाई भ्रष्टाचारी, राजनीतिक दलभित्रका विकृत नेता र सोही आचारण भएका जनताले बिगारेको श्रेष्ठले आरोप लगाउनु भएको छ । 'बिबिसी, सीएनएन, अलजजिरा, फोक्स न्यूजहरुमा पछिल्लो समय नेपालमा व्याप्त रहेको भ्रष्टाचार सम्बन्धिको समाचार प्रशारण भएका छन् । यसले गर्दा नेपालको छवि अन्तर ाष्ट्रिय स्तरमा बिग्रेको छ ।' डा. श्रेष्ठको भनाइ छ । उहाँले भ्रष्ट नेताहरुको ठाउँमा इमान्दार, सक्षम र देशलाई सच्चा माया गर्ने नेताहरुको आवश्यकता रहेको बताउनुभएको छ । नागरिक अगुवा श्रेष्ठले पछिल्लो समय नयाँ पुस्ताको मातृभाषाप्रतिको विकर्षणप्रति चिन्ता व्यक्त गर्दै नेपालभाषा क्लब, आदिवासी नेवाः राजनीतिक अभियान तथा नेवाः ग्वहालि पुचःले भाषा संरक्षणमा दिँदै आएको योगदानको चर्चा गर्नुभयो ।

क ा य ´ त्र 5 म म ा समाजसेवी श्रीकृष्ण मानन्धरले टोखा नगरपालिका वडा नं. २ र ३ मा स्थानिय पाठ्यक्रम बनाएर नेपालभाषाको अध्यापन सुरु गराएको जानकारी दिनुभयो । स्थानिय सरकार सञ्चालन ऐनले दिएको अधिकार प्रयोग गरी मातृभाषा अध्यापन

बाँकी पेज ७ मा

## उपत्यकामा ६ सय ८० जनामा डेंगु सङ्क्रमण

काठमाडौं । देशभरि डेंगुका बिरामीको सङ्ख्या ६ हजारभन्दा बढी नाघेको छ । इपिडिमियोलोजी तथा सरुवा रोग नियन्त्रण महाशाखाका अनुसार डेंगु रोगको सङ्क्रमण हुम्ला र मुस्ताङ २ वटा जिल्लामा बाहेक सबै ७५ जिल्लामा फैलिएको देखिएको छ ।

महाशाखाका किटजन्य रोग शाखाका प्रमुख डा.गोकर्णप्रसाद दाहाल अनुसार ६ हजार तीन सय ४७ जनामा डेङ्गी रोगको सङ्क्रमण देखिएको छ। यस्तै तीन जनाको निधन भइसकेको छ । पानी जम्ने सफा ठाउँमा 'एडिज एजिप्टी र एडिस एल्बोपिक्टस' प्रजातिको लामखुट्टेले फुल पार्दछ र ति फुलबाट लार्भा निस्कन्छ र त्यही लार्भा बयस्क भएपछि मानिसलाई टोकेर डेंगु लाग्दछ ।

डेंगु सबभन्दा बढी गण्डकी प्रदेशमा देखिएको छ । महाशाखाका अनुसार गण्डकी प्रदेशमा दुई हजार नौ सय ५४ देखिएको छ । कोशी प्रदेशमा सात सय ९१ जना, मधेसमा सय जना, बागमतीमा एक हजार छ सय २३ जना, लुम्बिनी चार सय ४४ जना, कर्णालीमा ९३ जना र सुदूरपश्चिम प्रदेशमा तीन सय ४२ जना सङ्क्रमण देखिएको छन् ।

काठमाडौं उपत्यकामा छ सय ८० जनामा डेंगु सङ्क्रमण देखिएको छ। काठमाडौंमा पाँच सय ११, भक्तपुर ६९ र ललितपुर सय जनामा डेंगु सङ्क्रमण देखिएको छ । वर्षाका बेला सङ्कलन गरिएको पानीमा लामखुट्टे रहने र त्यही लामखुट्टेले टोक्ने भएकाले डेंगु सङ्क्रमण बढेको हो । स्वास्थ्य तथा जनसङ्ख्या मन्त्रालयले डेङ्गी रोगको सङ्क्रमण बढेपछि हरेक शुक्रबार सरकारी तथा गैरसरकारी कार्यालयमा र अस्पताल परिसरमा सरसफाइ

बाँकी पेज ७ मा

## प्रेमशान्ति तुलाधरलाई वैकुण्ठ लाकौल पुरस्कार



काठमाडौं । बागमती प्रदेशकी सामाजिक विकासमन्त्री हरिप्रभा खड्गीले नेपालभाषा, साहित्य र संस्कृतिलाई बचाइराख्ने हो भने पुस्तान्तरण गर्नुपर्ने बताएका छन् । नेपालभाषा केन्द्रीय विभागको ५४ औं स्थापना दिवसका अवसरमा आयोजित बैकुण्ठ एवम् चैन लाकैल पुरस्कार प्रदान कार्यक्रममा प्रमुख अतिथिको आसनबाट बोल्दै उनले उक्त कुरा बताएका हुन् ।

मन्त्री खड्गीले उपत्यका सांस्कृतिक नगरी भएकोले यहाँको मूर्त अमूर्त सम्पदा हरहालतमा बचाइराख्नु पर्ने मान्यताका साथ आफू काठमाडौं महानगरपालिकाको उपमेयर रहेको समयदेखि लागिराखेको र अहिले पनि आफ्नो मन्त्रालयको तर्फबाट हुने र सक्नेजति सहयोग गर्न प्रतिवद्ध रहेको बताए । कार्यक्रममा नेपालभाषा, साहित्य र समालोचना विधामा

बाँकी पेज ७ मा

## नेपाल भाषा तथा मैथिली भाषामा समाचार सेवा उपलब्ध गराउने तयारी

काठमाडौं । राष्ट्रिय समाचार समिति (रासस) ले सोमवार देखि औपचारिक रूपमा २४ सै घण्टा समाचार सेवा प्रदान गर्दैछ । हरेक दिन बिहान ६:०० बजेदेखि राति ११ बजेसम्म सत्य, तथ्य, निष्पक्ष र आधिकारिक समाचार सामग्री सम्प्रेषण गर्दै आएको राससले सोमबारबाट नेपाली समाचार सेवा निरन्तर प्रदान गर्न लागेको हो ।

सञ्चार तथा सूचना प्रविधिमन्त्री पृथ्वीसुब्बा गुरुङले २४ घण्टे सेवाको औपचारिक रूपमा शुभारम्भ गर्नुहुने छ । राससले यही भदौ ११ गतेदेखि परीक्षणका रूपमा २४ घण्टा समाचार सेवा प्रदान गर्दै आएको छ । आधिकारिक समाचार र सूचनाको मुहानका रूपमा रहेको राससले अन्तर्राष्ट्रिय समाचार समितिहरूले प्रदान गर्दै आएको सेवा र अभ्यास तथा स्वदेश तथा विदेशका आफ्ना सेवाग्राहीको मागलाई समेत दृष्टिगत गरी २४सै घण्टा सेवा प्रदान गर्न लागेको हो ।

स्थापनाकालमा दिनको एकपटक साँझ मात्र बुलेटिन प्रकाशन गर्ने राससले सेवाग्राहीको मागलाई मध्यनजर गरी केही समय बिहान, दिउँसो र राति गरी दिनको तीनपटक बुलेटिन प्रकाशन गर्ने गर्दथ्यो । त्यसपछि लामो समयसम्म बिहान, मध्याह्न, अपरान्ह, साँझ र राति गरी दिनको पाँचपटक बुलेटिन प्रकाशन गर्दै आएकामा

बाँकी पेज ७ मा

## मधेशको मुद्दाप्रति मधेशी दलहरुको उदासीनता किन ?

काठमाडौं । मधेश जनजागरण अभियानले मधेशको मुद्दाप्रति मधेशी दलहरु असंवेदनशील र गैरजिम्मेवार भएको आरोप लगाएको छ । अभियानले मधेशी दलहरुलाई मधेशको मुद्दाप्रति गम्भीर आग्रह गर्दै खबरदारीसमेत गरेको छ ।

अभियानले आइतबार काठमाडौंस्थित मधेश मिडिया हाउसमा 'मधेशको मुद्दाप्रतिम धेशी दलहरुको उदासीनता किन ?' विषयक पत्रकार सम्मेलन गरी मधेशी दलहरुलाई खबरदारी गरेको हो ।

अभियानले पत्रकार सम्मेलनमा जारी गरेको विज्ञप्तिमा भनेको छ, 'नेपाल सरकार र मधेशी पार्टीहरुबीच विगतमा भएका सम्झौताहरुको कार्यान्वयनमा देखिएको ढिलाइप्रति हाम्रो गम्भीर ध्यानाकर्षण भएको छ। सम्झौता कार्यान्वयनको प्रक्रियामा देखिएको यस प्रकारको असंवेदनशीलता र गैरजिम्मेवारीले देशको संघीय लोकतान्त्रिक प्रणालीप्रतिम धेशी जनताको विश्वासमा गम्भीर असर परेको छ ।'

मधेशी समुदायका हकअधिकार सुनिश्चित गर्नका लागि सम्झौतामा उल्लेखित बुँदाहरुको समयमै कार्यान्वयन अत्यावश्यक रहेको भन्दै अभियानका नेताहरुले यी सम्झौताहरुलाई अझै पनि पूर्णरुपमा कार्यान्वयन गर्न नसक्नु मधेशी दलहरुको इच्छाशक्ति र प्रतिबद्धतामाथि गम्भीर प्रश्नचिन्ह खडा गरेको टिप्पणी गरेका छन् ।

पत्रकार सम्मेलनमा अभियानका संयोजक रंजीत कुमार झाले अभियानको तर्फबाट यस विषयमा गम्भीर चिन्ता व्यक्त गर्दै मधेशी दलहरुलाई सम्झौताका सबै बुँदाहरुलाई तत्काल कार्यान्वयनमा ल्याउन जोडदार माग गरेका छन् । उनले सम्झौताका बुँदाहरुमा स्पष्टरुपमा उल्लेख भएका संघीयता, समानुपातिक प्रतिनिधित्व, समावेशीकरण र मधेशी जनताका अधिकारहरुको पूर्ण सुनिश्चितताका लागि मधेशी दलहरुले तुरुन्तै आवश्यक कदम चाल्नुपर्ने आग्रह गरे ।

बाँकी पेज ७ मा

## बैंक तथा वित्तिय संस्थालाई सरकारको संरक्षण, सर्वसाधारणले नपत्याएपछि हुँदैछ तिनको धन्दा चौपट !

अनुसा थापा

'ठग' बैंक तथा वित्तिय संस्थालाई सरकारको संरक्षण, सर्वसाधारणले नपत्याएपछि हुँदैछ तिनको धन्दा चौपट !

पाँच वर्षअगाडिको कुरा हो, गाउँदेखि शहरसम्म बैंक तथा वित्तिय संस्थाका लागि घर भाडामा दिनको लर्को थियो । बैंक, सहकारी, लघुवित्त, फाइनेन्सलाई घरधनीले प्राथमिकतामा राखेका थिए । एउटै घरमा सात वटासम्म लघुवित्त, सहकारी र फाइनेन्सको बोर्ड देखिन्थ्यो ।

घरैपिच्छे थिए यी संस्था । बैंक तथा वित्तिय संस्थालाई घर बहालमा लाउन पाउँदा घरधनीहरु मख्ख पर्थे । नातेदार र इष्टमित्रमा समेत विज्ञापन गर्थे । आफ्नो घर यो बैंक बसेको छ, यो सहकारी सञ्चालनमा छ भनेर सुनाएको सुन्यै गर्थे । जब बैंक तथा वित्तिय संस्थाको ठगीधन्दाको पर्दाफास भयो, त्यसपछि ती संस्थाको बिजनेस डामाडोल भए ।

सर्वसाधारणले बैंक तथा वित्तिय संस्थालाई विश्वास गर्न छाडे । बैंकबाट दिनदहाडे रकम चोरी हुन थाल्यो । पहिलेपहिले पनि त्यस्तो हुन्थ्यो तर बचतकर्ता बाहिर आउन सकेका थिएनन् । बैंकको दबदबा भएकाले बचतकर्ता मौनता साँधेर बसेका थिए । तर, एकपछि अर्को गर्दै बचतकर्ताले बैंकको कालो कर्तुतको भण्डाफोर गर्न थाले ।

यता, वित्तिय संस्थाबाट सुकुम्बासी भएका अनगिन्ती छन् । करोडको धितो केही लाखमै बैंकले पचाइदिन्छ। बैंकले धेरैको बिल्लीबाठ बनाएको पाइन्छ। त्यसैले पछिल्लो समय बैंकबाट ऋण लिने शून्यबराबर छन्। कोही ऋण लिनै जादैनन्। सडकदेखि सदनबाट बैंक तथा वित्तिय संस्थाको ठगीधन्दाको कुरा उठ्यो ।

सरकारले बाध्य भएर एउटा छानबिन समिति नै गठन गर्यो । बैंक तथा वित्तिय संस्था बसेको घरका धनीहरु

बाँकी पेज २ मा

### बैंक तथा.......

नगरपालिका, वडा धाउने क्रम बढेको छ । धेरै सहकारी भागिसकेको छ । सञ्चालनमा भएकाले पनि बहाल तिर्न सकेको छैन् । लघुवित्तको हालत पनि त्यस्तै छ । एकातिर भाडा पनि पाएका छैनन्, अर्कोतिर आफ्नो घर तोडफोड हुने हो कि भन्ने भय ।

सञ्चालक भागेपछि सहकारीको कार्यालय धाउने बचतकर्ता यत्तिकै छन् । कार्यालय खुलेको छ कि भनेर दिनहुँ हुल पुग्छन् । त्यसैले घरधनीहरु तर्सिएका छन् । घरघरमा भकारीको नारा लगाएर बैंक तथा वित्तिय संस्थाको कार्यालयमा स्थापना गरियो । आम सर्वसाधारणले पनि होला भन्ठाने ।

तर, पछि मात्र सर्वसाधारणले बैंक तथा वित्तिय संस्थाको असली उद्देश्य थाहा पाए । तिनको उद्देश्य सीधासाधीलाई सोत्तर बनाउनु थियो । आफ्नो उद्देश्यमा तिनीहरु सफल भएपनि । सेवा दिने नाममा सुकुम्बासी बनाइयो । ठगीधन्दाको विरोधमा पीडित सडकमा आइसकेका छन् ।

तर, सरकार अनदेखा गरेर बसेको छ । न सहकारी महासंघका ठग पदाधिकारीहरुलाई समात्छ न बैंकका सञ्चालकहरुलाई कानुनको दायरामा ल्याउँछ । पीडितहरु भने महिनौंदेखि तातो घाममा आफ्ना माग राखिरहेका छन् । यद्यपि, सरकार सुन्दैन् । अहिले बजारमा दुइटा कुरामा व्यापक चर्चा चलेको छ ।

बैंक तथा वित्तिय संस्थाले लिलाम गरेको सम्पत्ति नकिनौं र ऋण पनि नतिरौं । कानुनमा सुकुम्बासी भन्ने नै छैन् । कुनै व्यक्तिसँग आफ्नो जग्गा छैन्, बस्ने ठाउँ छैन् भने सरकारले व्यवस्थापन मिलाउनुपर्छ । गाँस, बाँस, कपास, शिक्षा, स्वास्थ्यको प्रबन्ध मिलाउने जिम्मा पनि सरकारकै हो ।

तर, बैंक तथा वित्तिय संस्थाले सम्पत्ति भएकाहरुलाई सुकुम्बासी बनाइरहेको छ । मीटरब्याजमा पैसा लगाउने, अनि ऋणीको घरखेत नै खाइदिने । अर्काको सबै सम्पत्ति पचाइदिने बैंक तथा वित्तिय संस्थालाई कारबाही हुनुपर्ने हो कि होइन् ? बैंक तथा वित्तिय संस्थाका कर्मचारी देख्नेबित्तिकै सर्वसाधारण मुख बिगार्छन् ।

'चोर, फट्‌टाहा, दलाली' भन्छन् । गाउँमा सहकारी, लघुवित्त लखेट्न शुरु भइसकेको छ । राजधानीका घरधनीहरु स्थानीय पालिकाको शरणमा पुगेका छन् । आफ्नो घर खाली गराइदिन भन्दै उनीहरुले निवेदन दिइसके । सहकारीले लाखौंलाई पीडित बनाएको छ । आफ्नो पीडा सुनाउन सडकमा आएकामाथि सरकारले लाठी चार्ज गर्‍यो । तिनको कुरा सुन्नुको साटो प्रहरी उतारेर दमन गर्नु वास्तवमै लाजमर्दो छ । अब विस्तारै बैंक तथा लघुवित्तका पीडित पनि सडकमा आउलान् । अनि सरकारले कति जनामाथि लाठी चार्ज गर्छ ? बैंक तथा वित्तिय संस्था 'ठग' हो भन्ने सबैलाई थाहा छ । तर, तीन जनाले थाहा पाएनन् ।

प्रधानमन्त्री केपी शर्मा ओली, अर्थमन्त्री विष्णु पौडेल र राष्ट्र बैंकका गर्भनर महाप्रसाद अधिकारीले बैंक तथा वित्तिय संस्थाको कर्तुतबारे थाहा पाएनन् कि बुझ् पचाए ? उनीहरुले नै जानुन् । बैंक तथा वित्तिय संस्थाले दिएको पीडा सहन नसकेर धेरैले आत्महत्याको बाटो रोजे ।

कतिपय भित्रभित्रै पीडा पालेर बसेका छन् । करोडौंले आफूसँग भएको सम्पत्ति गुमाए । तैपनि देशको जिम्मेवार पदमा बसेकाहरुले नदेख्नुले सर्वसाधारण आश्चर्यमा छन् । बैंक तथा वित्तिय संस्थाका ठगहरुलाई सरकारले नै जोगाएको पीडितहरुको आरोप छ । सरकारले बैंक तथा वित्तिय संस्थाका पीडितलाई हलुकामा लिएको छ ।

सरकारले ख्यालख्याल गर्ने हो भने भोलि ठूलै क्षति व्यहोर्नुपर्ने हुन्छ । सरकारले अब सहकारी र लघुवित्तको दर्ता खारेज गरिदिनुपर्छ । आज लाखौं पीडित बन्नुमा सरकारको पनि उत्तिकै संलग्नता छ । ठग संस्था खोल्न अनुमति दियो, सर्वसाधारण त्यहाँ लगेर बचत गरे । 'मर्नु न बाँच्नु' को अवस्था बनाइदिएको छ, सहकारीले ।

अहिले सबै कन्ट्रोलमा छ । सहकारी पीडित, मीटरब्याज पीडित, लघुवित्त पीडितहरुले शान्तिपूर्ण आन्दोलन गरिरहेका छन् । सरकारले अनदेखा गर्ने हो र प्रहरी दमन गर्न खोज्ने हो भने यसले हिंसाको रुप लिन सक्छ । त्यतिबेला सरकारलाई नै सकस पर्ने हो । त्यसैले जनताको पीडासँग खेलबाड गर्ने कोशिस नगरौं ।

सर्वसाधारणले आफूलाई ठग्नेलाई कानुनको कठघरामा उभ्याउन माग गरेका छन् । त्यति पनि गर्न नसक्ने के सरकार ? प्रधानमन्त्री केपी शर्मा ओलीले माफियाको पक्षमा काम गर्दै आएका छन् । यस्तै अवस्था रहेमा पीडितले प्रधानमन्त्री लखेट्न बेर नलाउलान् । जनतालाई चिन्ता एकातिर छ, प्रधानमन्त्रीको गफ अर्कोतिर ।

ज्नताको समस्या अनदेखा गरेर हावा भाषण दिँदै हिँडेका छन्, प्रधानमन्त्री । प्रधानमन्त्री ओली झण्डै तीन करोड नेपालीको अभिभावक हुन् । तर, उनी माफियाको पक्षमा मात्र काम गर्छन् । जनता कुन पीडामा छन् ? उनीहरु कहाँकहाँ ठगिएका छन् ? प्रधानमन्त्रीले त्यो बुझ्नुपर्ने हो ।

तर, उनलाई चासो नै छैन् । बैंक तथा वित्तिय संस्था देशभित्र त बद्नाम भए नै, अन्तर्राष्ट्रिय स्तरमा पनि बदनाम भए । जसले गर्दा नेपाल पनि विश्वमै बद्नाम भएको छ । आज पनि सरकार करको लोभमा छ । करको लोभले गर्दा सरकारले बैंक तथा वित्तिय संस्थाका सञ्चालकलाई कारबाही गर्न सकेन् ।

बैंक तथा वित्तिय संस्थामा बचतकर्ताले किन पैसा गर्थे ? आफ्नो पैसाको सुरक्षा हुन्छ भनेर । तर, अहिले बैंक तथा वित्तिय संस्थालाई हेर्ने आम सर्वसाधारणको दृष्टिकोणमा निकै परिवर्तन आएको छ । सर्वसाधारण बुझ्ने भइसकेका छन् । बैंक तथा वित्तिय संस्थाको असली धन्दा बुझे, अब ठगहरुले चाहेर पनि ठग्न सक्दैनन् ।

ठग्न नपाउँदाको असर सहकारीमा देखिहालियो । सहकारी भागिहाल्यो । अब अन्य ठगहरुको सिद्धिने दिन आउँदैछ ।

भक्तपुर

## ब्राजिलमा एक्स माथि प्रतिवन्ध




काठमाडौं । ब्रालिलमा शनिबार विहानदेखि एक्स बन्द छ । वेबसाइट मात्र होइन, मोबाइल एप पनि चल्दैन । किनकी त्यहाँको सर्वोच्च अदालतका न्यायाधीश एलेक्जेन्डर डी मोरेसले दिएको समयसीमा भित्र अर्बपति मालिक एलन मस्कले कानुनी प्रतिनिधि राखेनन् । जसको कारण अदालतले मस्क सम्वन्धित एक्स र उनकै स्वामित्वमा रहेको स्टारलिंक इन्टरनेट माथिसमेत प्रतिवन्ध लगाउने आदेश दिएको छ ।

विश्वमै चर्चित सामाजिक सञ्जाल एक्समाथि लगाएको प्रतिबन्धलाई लिएर प्रयोगकर्तासँगै राजनीतिकर्मीहरु पनि विभाजित देखिएका छन् । आइतबारबाट कयौं ब्राजिलियनहरुले एक्सको अभावमा विश्वबाट अलग भएको प्रतिक्रिया अन्य सामाजिक सञ्जाल मार्फत व्यक्त गरेका छन् ।

एक्सका लागि ब्राजिल ठूलो बजार हो । एक अध्ययन अनुसार ४० मिलियन ब्राजिलियनहरुले कम्तीमा महिनामा एक पटक एक्स चलाउँछन् । त्यही एक्समाथि प्रतिबन्ध लागेपछि चिको बार्नीले थ्रेड्समा लेखेका छन्, 'यस्तो लागेको छ कि मलाई दुनियामा के भइरहेको छ, थाहा छैन ।'

प्रयोगकर्ता अन्य सञ्जालतिर आकर्षित

पछिल्लो केही दिनमा अरु सामाजिक सञ्जालमा ब्राजिलियनहरुको उपस्थिति उल्लेख्य बढेको छ । एक्सको विकल्पका रुपमा गत वर्ष सञ्चालनमा आएको ब्लू स्काईमा लगभग २ लाख नयाँ प्रयोगकर्ता थपिएका छन् र, यो हरेक मिनेटमा बढ्दो छ । कम्पनीले शुक्रबार जनाए अनुसार ब्राजिलका प्रयोगकर्ताहरुले फलो, लाइन जस्ता गतिविधिमा समेत रेकर्ड बनाएका छन् । सञ्जाल फेर्नु ब्राजिलका मानिसहरुका लागि असामान्य पनि होइन । कुनै समय ओरकुट प्रयोगकर्ता धेरै थिए, यो बन्द भएपछि सहजै अरु प्लाटफर्ममा गए । एक्स पनि फेसबुक, इन्टाग्राम, युट्युब र टिकटक जति लोकप्रिय छैन । तर राजनीतिक बहसका लागि एक्स महत्वपूर्ण प्लाटफर्म थियो, जहाँ राजनीतिकर्मी, पत्रकार र ओपेनियन मेकरहरु प्रभावशाली छन् ।

हास्य व्यग्यका लागि पनि एक्स नै रोजिन्थ्यो । ब्राजिलमा निकै भाइरल भएका मिमहरु अरु सञ्जालमा भन्दा पहिला एक्समा पोष्ट हुन्थे ।

के हो मस्क र मोरेसको विवाद ?

यो विवाद अप्रिलमा सुरु भएको थियो, जब न्यायाधीशले गलत सूचना फैलाएको भन्दै दर्जनौं एक्स एकाउन्ट बन्द गर्न आदेश दिए । यसको जवाफमा मस्कले भने, 'स्वतन्त्र अभिव्यक्ति लाकेतन्त्रको आधारशीला हो । ब्राजिलमा अनिर्वाचित छद्म न्यायाधीशले राजनीतिक दबाबमा यसलाई नष्ट गर्दैछन् ।'

२०२२ को राष्ट्रपति चुनावताका गलत सूचनाको बाढी नै आयो, ब्राजिलको सर्वोच्च अदालतले इन्टरनेटमा फैलिएका त्यस्ता सामाग्री हटाउन आदेश दिने अधिकार न्यायाधीश मोरेसलाई दिएको थियो । उनले आक्रामक अभियान चलाए, जसका कारण सामाजिक सञ्जालहरु हजारौं पोष्ट हटाउन बाध्य भएका छन् ।

हालैका महिनाहरुमा एलन मस्कले न्यायाधीश मोरेसको चर्को आलोचना गरे । जवाफमा मोरेसले मस्कलाई संघीय जाँचमा सहभागी हुन दबाब बढाए । दबाब बढ्दै गएपछि एक्सले गत महिना ब्राजिलका लागि कानुनी प्रतिनिधिलाई हटायो ।

बुधबार राति स्थानीय समयअनुसार ८:०७ मा न्यायाधीश मोरेसले २४ घन्टाभित्र नयाँ कानुनी प्रतिनिधि नियुक्त गर्न आदेश दियो । त्यसो नगरे आगामी अक्टोबरमा हुने नगर चुनावमा समस्या आउने स्थानीय अधिकारीहरुको बुझाइ थियो ।

साथै १८.५ मिलियन जरिवाना तोकियो । तर एक्सले कानुनी प्रतिनिधि नियुक्त गरेन, बरु ब्राजिलमा रहेको कार्यालय बन्द गर्‍यो ।

त्यसको प्रतिउत्तरमा न्यायाधीश मोरेसले शुक्रबार एक्समाथि पूर्ण प्रतिबन्ध लगाए ।

अब ब्राजिलमा कसैले भीपीएन प्रयोग गरेर एक्स चलाउँछ वा चलाउने कोसिस गर्छ भने प्रतिदिन ९ हजार डलर जरिवाना तिर्नुपर्ने पर्छ । यो रकम औषत ब्राजिलियनको एक वर्षको कमाई बराबर हुन्छ । त्यहाँको बार एशोसिएसनले वक्तव्य जारी गर्दै जरिवाना पुनरावलोकन गर्न अपील गरेको छ ।

साथै ब्राजिलमा मस्कको स्याटलाइट इन्टरनेट फर्म स्टारलिंकको बैंक खाता समेत रोक्का गरिएको छ ।

स्टारलिंकमा मस्कको ४० प्रतिशत लगानी छ, जसलाई तत्कालीन राष्ट्रपति बोल्सेनारोले सञ्चालन अनुमति दिएका थिए । २०२२ को चुनावमा बोल्सेनारोलाई हराएका राष्ट्रपति लुइस इनासियो लूला दा सिल्भाले भने अदालतको आदेशको समर्थन गरेका छन् । 'धेरै पैसाले ब्राजिलको कानुनको अनादर गर्ने अनुमति दिँदैन' उनले एक रेडियोसँग भनेका छन्, 'एलन मस्क अमेरिकी नागरिक हुन्, दुनियाँका होइनन् ।'

## भक्तपुरमा नापतौल डोर कार्यक्रम सुरु




भक्तपुर : भक्तपुर नगरपालिका र भक्तपुर उद्योग वाणिज्य संघको सहकार्यमा जिल्लामा मंगलबारदेखि नापतौल डोर कार्यक्रम सुरु भएको छ ।

जिल्लाका उद्योगी, व्यवसायी तथा व्यापारीहरुले प्रयोग गर्दै आएको नापतौलका सामग्रीहरुको नयाँ दर्ता तथा नवीकरणका लागि गुणस्तर तथा नापतौल कार्यालय, त्रिपुरेश्वरबाट खटिएको कर्मचारीहरुको टोलीले नापतौल डोर कार्यक्रम सञ्चालन गरेको हो । पहिलो दिन भक्तपुर नगरपालिकाको वंशगोपालस्थित ३ नं. वडा कार्यालय परिसरमा कार्यालय राखेर सञ्चालन गरिएको डोर कार्यक्रममा स्थानीय व्यवसायी, व्यापारीहरुले आआफ्ना नापतौलका सामग्रीहरु दर्ता तथा नवीकरण गराएको संघले जनाएको छ ।

आफ्नै घरआँगनमा आफूहरुले प्रयोग गर्दै आएको नाप्ने तथा तौलने सामग्रीहरुको दर्ता तथा नवीकरण गर्न पाउँदा स्थानीय खुसी भएको संघका कोषाध्यक्ष एवं संघअन्तर्गतको बजार अनुगमन उपसमितिका संयोजक विश्वराम दुवालले जानकारी दिए । गुणस्तर तथा नापतौल कार्यालय, त्रिपुरेश्वरबाट जिल्लामै डोर टोली खटाउँदा उद्योगी, व्यवसायी तथा व्यापारीहरु समय खर्चेर दर्ता तथा नवीकरणका लागि काठमाडौं पुग्नुपर्ने झन्झटबाट मुक्त भएको उनको भनाइ छ ।

संघकी अध्यक्ष रोशनीमैयाँ धौबन्जाले भक्तपुर उद्योग वाणिज्य संघको पहलमा जिल्लाका उद्योगी, व्यवसायी तथा व्यापारीहरुको सहजतालाई मध्यनजर गरी विगतका वर्षहरुमा पनि डोर कार्यक्रम सञ्चालन गर्दै आएको बताइन् । आगामी वर्षहरुमा पनि जिल्लाका विभिन्न स्थानमा डोर कार्यक्रम सञ्चालनलाई निरन्तरता दिन पहल गर्ने उनले जानकारी दिइन् ।

संघका अनुसार नापतौल डोर कार्यक्रमअन्तर्गत १९ गते बुधबार सुकुलढोका पाटीमा डोर कार्यालय राखेर टोलीले सेवा दिने भएको छ । यसैगरी, २० गते बिहीबार लिवाली चोकस्थित एसएन मेटल वर्कसप परिसरमा, २३ गते आइतबार कमलविनायकस्थित बिग मार्ट परिसरमा, २४ गते सोमबार बाराही मन्दिरनजिक डोर कार्यालय रहने छ । त्यसैगरी, २५ गते मंगलबार सल्लाघारी चोडा गणेश मन्दिर तलको ढुंगेधारा पाटीमा डोर कार्यालय राखेर नापतौलका सामग्रीहरुको नयाँ दर्ता तथा नवीकरण सेवा प्रदान गरिने संघले जनाएको छ ।

भक्तपुर नगरपालिकाका व्यवसायी, व्यापारीहरुले प्रयोग गरेका नापतौलका सामग्रीहरुको नियमानुसार जाँच गरी नयाँ दर्ता तथा नवीकरण गरिदिएको गुणस्तर तथा नापतौल कार्यालय, काठमाडौंका सहायक निरीक्षक गोविन्द पहारीले बताए ।

## शान्ति खलःद्वारा सम्मान कार्यक्रम सम्पन्न

काठमाडौं । मध्यपुर थिमिबाट भित्र कुल बासस्थान भई काम विशेषले उपत्यकाका विभिन्न स्थानहरुमा बसोवास गरिरहेका थिमिबासीहरुको साझा संस्था शान्ति खलःले संस्थाका जेष्ठ सदस्यहरु जो ज्याजंको सकिएकाहरुलाई एक कार्यक्रमको आयोजना गरि सम्मान गरेको छ । संस्थाको वार्षिक कार्यक्रम अन्तर्गत संस्थाका सदस्यहरुका छोराछोरीहरु जो विद्यालय शिक्षा पुरा गरी एसईई उतीर्णलाई संस्थाको सदस्यता प्रदान गर्दै सम्मानसमेत गरेको संस्थाका अध्यक्ष रत्नसुन्दर कायस्थले जानकारी दिएका छन् ।

कार्यक्रम मध्यपुर थिमि नगरपालिकाका नगर प्रमुख सुरेन्द्र श्रेष्ठले पानसमा दिप प्रज्वलन गर्दै शुभारम्भ गरेको थियो । कार्यक्रममा मध्यपुर थिमि नगरपालिकाका संस्थापक पूर्व नगर प्रमुख मदनकृष्ण श्रेष्ठ, शान्ति बहुउद्देश्यीय सहकारीइका अध्यक्ष बालगोपाल श्रेष्ठलगायतका व्यक्तिहरुले शान्ति खलःले गरेका सामाजिक उत्तरदायित्वका विषयमा चर्चा गरेको थियो ।

कार्यक्रम संस्थाका अध्यक्ष रत्नसुन्दर कायस्थको सभापतित्वमा भएको थियो भने कार्यक्रममा सहजीकरण संस्थाका सचिव मदन जोशीले गरेको थियो ।

त्यस्तै कार्यक्रममा संस्थामा आजीवन सदस्य बनेका सदस्यहरुलापनि दोसल्ला ओदाएर सम्मान गरेको थियो । त्यस्तै कार्यक्रममा स्वागत मन्तव्य संस्थाका उपाध्उक्ष रामचन्द्र भिदुवा श्रेष्ठले राखेको कार्यक्रम क्षेत्रपाटी स्थित क्षेत्रपाटी पार्टी प्यालेसमा सम्पन्न भएको थियो । संस्थाले हरेक वर्ष संस्था सदस्यहरुको सहभागितामा बहुत रुपमा सरस्वती पुजा गर्दै आईरहेकोमा यस वर्ष पनि गरिनृ संस्थाका अभ्यक्ष श्रेष्ठले जानकारी दिएका छ ।

# जागिर खाँदै इन्जिनियर बन्नेहरूका लागि नेक विडिएच

काठमाडौं । एसईई उत्तिर्ण गरेपछि तीनवर्षे डिप्लोमा (सिभिल वा आर्किटेक्चर) र ९ देखि १२ सम्मको राष्ट्रिय परीक्षा वोर्डको टेक्निकल-भोकेसनल सिभिल इन्जिनियरिङ गरेर जागिर खाइरहेकाहरुलाई त्यसभन्दा माथिको उच्च शिक्षा हासिल गर्न सहज हुँदैन । दैनिक ६ घण्टा हप्ताको ६ दिन कलेज धाएर पढ्नुपर्ने बाध्यताले गर्दापनि डिप्लोमा होल्डर्सहरुमा आफ्नो पढाईको चाहना मनमै दवाएर राख्नुपर्ने परिस्थिति छ । यद्यपि, 'जहाँ इच्छा त्यहाँ उपाय' भनेजस्तै पढ्दै काम गर्ने सोच बनाएकाहरुलाई उपाय नभएको हैन ।

डिप्लोमा गरेर सरकारी तथा गैरसरकारी निकायमा काम गरिरहेकाहरुलाई पढेर विश्वविद्यालयको सर्टिफिकेट हासिल गर्ने सहज उपाय सन्ध्याकालिन कक्षा हो । तर, यो सबै कलेज तथा विश्वविद्यालयहरुमा छैन ।

नेपाल इन्जिनियरिङ कलेज (नेक) ले भने सिटिइभिटीको डिप्लोमा होल्डर्स विद्यार्थीको समस्या निराकरण गर्न 'ब्याचलर इन सिभिल इन्जिनियरिङ फर डिप्लोमा होल्डर्स' कार्यक्रम चलाइरहेको छ । जहाँ दिउसो काम गरेर साँझको समय अध्ययन गर्न सकिन्छ । पोखरा विश्वविद्यालयबाट सम्बन्धन प्राप्त नेकमा तीनवर्षे डिप्लोमा (सिभिल वा आर्किटेक्चर) र ९ देखि १२ सम्मको राष्ट्रिय परीक्षा वोर्डको टेक्निकल-भोकेसनल सिभिल इन्जिनियरिङ गरेकाहरुलाई इन्जिनियर बनाउनकै लागि 'ब्याचलर इन सिभिल इन्जिनियरिङ फर डिप्लोमा होल्डर्स' कार्यक्रम छ ।

डिप्लोमा इन्जिनियर्स एसोसिएसन नेपालको पहलमा नेपालमा पहिलो पटक आधिकारीक रुपमा सरकारी तथा गैरसरकारी संघ संस्थामा कार्यरत सिभिल तथा आर्किटेक्चर सव-इन्जिनियरहरूको लागि सिभिल इन्जिनियरिङ पढाईको लागि नेपाल इन्जिनियरिङ कलेजका तत्कालिन संस्थापक अध्यक्ष स्व. प्रा.डा. दिपक भट्टराई, पूर्व प्राचार्य प्रा.डा. हरिकृष्ण श्रेष्ठ र प्रा.डा. राजेन्द्र प्रसाद अधिकारीले पोखरा विश्वविद्यालयसँग समन्वय गरि सन् २००१ देखि 'ब्याचलर इन सिभिल इन्जिनियरिङ फर डिप्लोमा होल्डर्स' कार्यक्रम सञ्चालन गरेका हुन् । सिभिल इन्जिनियरिङ अध्ययन गर्ने चाहना भएपनि बञ्चित सरकारी तथा गैरसरकारी संघ संस्थामा कार्यरत सिभिल तथा आर्किटेक्चर सव-इन्जिनियरहरूलाई कुशल सिभिल इन्जिनियर बन्ने अवसर प्रदान गरिएको नेकका प्राचार्य दुर्गाप्रसाद भण्डारी बताउनु हुन्छ ।

'डिप्लोमा गरेका तथा फुल टाइम काम गरेर पार्टटाइम पढ्ने योजना बनाएकाहरुलाई यो विडिएच कार्यक्रम अत्यन्त लाभदायक छ। डिप्लोमा पछिपनि विश्वविद्यालयको सर्टिफिकेट प्राप्त गर्न सक्नुहुन्छ ।' प्राचार्य भण्डारी भन्नुहुन्छ । डिप्लोमा गरेकाहरुलाई काम गर्दै इन्जिनियरिङको उच्च शिक्षा अध्ययन गर्ने बाटो नेपाल इन्जिनियरिङ कलेजले खोलिदिएको छ ।

९ सेमेष्टरको यो विडिएच कार्यक्रम अन्य कार्यक्रम भन्दा एक सेमेष्टर लामो छ । स्नातक तहका अन्य कोर्ष चार वर्षे हुँदा यो कोर्ष पुरा गर्न भने साढे ४ वर्ष लाग्छ ।नेपाल इन्जिनियरिङ कलेजले 'ब्याचलर इन सिभिल इन्जिनियरिङ फर डिप्लोमा होल्डर्स' कार्यक्रम बेलुका ५:३० देखि ९:०० बजे (माघ देखि कार्तिक सम्म) र बेलुका ४:३० देखि ८:०० बजे सम्म (कार्तिक देखि माघ सम्म) सञ्चालन गर्दछ । साँझ सञ्चालन हुने कक्षाका कारण सरकारी तथा गैरसरकारी संघ संस्थामा कार्यरत सिभिल तथा आर्किटेक्चर सव-इन्जिनियरहरूले सिभिल इन्जिनियरिङ अध्ययन गर्नको लागि कार्यालयबाट अध्ययन बिदा लिनुपर्ने तथा जागिर नै छोडी पढ्नु पर्ने बाध्यता छैन ।

नेक विडिएच कार्यक्रममा १३० क्रेडिटको हुन्छ । हप्ताको ६ दिन वेलुका सैद्धान्तिक पढाई र शनिबार विहान ७ बजेदेखि ३ बजे सम्म प्रयोगात्मक कक्षा हुने गर्दछ । सन् २००१ देखि २०२१ सम्म आई पुग्दा नेक विडिएचमा ९०० बढी बिद्यार्थीहरुले सिभिल इन्जिनियरिङ अध्ययन गरि सकेका छन् ।

त्रिभुवन विश्वविद्यालयको २ वर्षे डिप्लोमा कार्यक्रम हुँदा फिजिक्स केमिष्ट्री र गणितको विस्तृत अध्ययन नहुने हुनाले विज्ञान र गणित विषय समावेश गरि थप एक सेमेष्टर अध्ययन गराउनु परेको थियो । तर, हाल तीन वर्षे डिप्लोमा कार्यक्रम भएको अवस्थामा यसलाई परिमार्जन गर्ने प्रस्ताव पोखरा विश्वविद्यालयसँग छ ।

नेकमा पोखरा विश्वविद्यालयले दिने छात्रबृत्ति सँगै कलेज आफैंले विभिन्न शिर्षकमा छात्रबृत्तिहरु पनि दिएको छ । प्रवेश परीक्षामा उत्कृष्ट हुने, सेमेस्टरमा उत्कृष्ट हुने विद्यार्थीहरूलाई छात्रवृत्ति दिइन्छ । यसका अलावा कलेजले प्रादेशिक तथा स्थानीय तहमा पनि छात्रबृत्तिहरु दिइरहेको कलेजका प्राचार्य भण्डारी बताउनु हुन्छ ।

सामाजिक शैक्षिक संस्थाका रुपमा जिल्ला प्रशासन कार्यालय भक्तपुरमा दर्ता भई पछिल्लो समय नेपाल सरकार, शिक्षा मन्त्रालय अन्तरगत गठन गरिएको बोर्डमार्फत यो कलेज सञ्चालनमा रहेकाले अन्य निजी क्षेत्रको दाँजोमा यहाँको शैक्षिक शुल्क कम रहेको छ भने, शैक्षिक गुणस्तर अन्तराष्ट्रिय स्तरकै रहेको छ ।





# हजुरआमाको कुनै मुल्य हुँदैन ? ८ घण्टाका लागि आयामा मासिक २३ लाख

पुर्वीय पारिवारिक र सामाजिक व्यवस्था अचम्मको छ। तर, तथाकथित आधुनिकताको नाममा हामीले यो सुन्दर व्यवस्थालाई ध्वस्त पारिरहेका छौं । यो प्रणाली समाप्त भएपछि समाज र परिवारमा कस्तो प्रभाव पर्छ हामीलाई थाहा छैन । अहिले हाम्रो परिवारमा हजुरआमा र हजुरबुवाको महत्व दिन प्रतिदिन घट्दै गएको छ। आधुनिक पुस्ताले तिनीहरूलाई बेकार मान्न थालेको छ । तर, आजको कथामा तपाईंले तिनीहरूको मूल्य थाहा पाउनुहुनेछ।

वास्तवमा यो कथा सात समुन्द्र पारी रहेको दक्षिण कोरियाको हो। यो देशले छोटो समयमा धेरै तीव्र आर्थिक प्रगति गरेको छ। यसको प्रतिकूल असर युवा पुस्ताको परिवार नामक संस्थाप्रतिको विश्वास गुमेको छ । सन्तान जन्माउन चाहँदैनन् । यहाँ प्रति महिला प्रजनन दर मात्र ०.७२ छ। यसलाई यसरी बुझ्न सकिन्छ कि प्रति १०० महिलामा ७२ जना मात्र बालबालिका छन् ।

जसका कारण यहाँका जनता जोखिममा छन् । सरकारले जनसङ्ख्या बढाउन विभिन्न किसिमका प्रोत्साहन दिइरहेको छ । तर, त्यसको कुनै असर परेको छैन । महिलाहरु किन आमा बन्न चाहदैनन् ? यसको मुख्य कारण यहाँ अधिकांश दम्पतीहरू काम गरिरहेका हुन्छन् । छोराछोरी हुर्काउने कोही छैन । अर्कोतर्फ, यदि दम्पतीले बच्चाहरूको हेरचाह गर्न आया राख्छन् भने, तिनीहरूले तलब तिर्न सक्षम छैनन् । किनभने यहाँका नियम कडा छन् र देशमा आयाको रूपमा काम गर्ने महिलाको ठूलो अभाव छ । दक्षिण कोरियाको नियम अनुसार आठ घण्टा एक आयाको तलब २३.८ लाख वन हुन्छ। वोन दक्षिण कोरियाको मुद्रा हो। यो रकम नेपाली रुपैयाँमा करिब २.४ लाख रुपैयाँ हुनेछ। यो खर्च यहाँको परिवारको औसत आम्दानीको झण्डै आधा हो । यदि यो परिवार यहाँ १६ घण्टा बस्यो भने, तिनीहरूसँग खानाको लागि पैसा हुनेछैन। अर्थात् बच्चा हुर्काउनका लागि यस्ता परिवारले नेपाली रुपैयाँमा प्रतिमहिना करिब ५ लाख रुपैयाँ खर्च गर्नुपर्ने हुन्छ । यस्तो अवस्थामा तपाईलाई अब आफ्नो परिवारमा हजुरआमाको महत्व थाहा भएको होला ।

२८४ बिलियन डलर प्याकेज

सरकारले मुलुकमा प्रजनन क्षमता बढाउन अहिलेसम्म २८४ अर्ब डलर खर्च गरिसकेको छ। यति हुँदाहुँदै पनि स्थितिमा सुधार आएको छैन । यस्तो अवस्थामा सरकारले अब विदेशी आया काममा लगाउन स्वीकृति दिने भएको छ । यसअन्तर्गत आगामी वर्षको मध्यसम्ममा फिलिपिन्सबाट करिब १२ सय आया काममा लिइनेछ। उनीहरूको तलब तुलनात्मक रूपमा कम छ।

# सिद्धार्थद्धारा जेष्ठ नागरिकलाई सम्मान

मध्यपुर थिमि । सिद्धार्थ बचत तथा ऋण सहकारी संस्था लिमिटेडले आफना जेष्ठ शेयर सदस्यहरुलाई सगुन सहित पोषण वितरण गरेर सम्मान गरेको छ । कुशेऔंसी अर्थात बुबाको मुखहेर्ने दिन पारेर आयोजना गरिएको कार्यक्रमको उद्घाटन मध्यपुर थिमि नगरपालिका वडा नं. ४ का वडाध्यक्ष बालकृष्ण श्रेष्ठले गरेको थियो ।

सिद्धार्थ साकोसका अध्यक्ष राजेश श्रेष्ठको सभापतित्वमा भएको उक्त कार्यक्रममा मध्यपुर थिमि नगरपालिकाका सहकारी शाखा प्रमुख अभयन्द्र रंजित, सहकारीविद् कैलाशभक्त प्रधानाङ्गलगायतका अतिथि वक्ताहरुले बुबाको मुख हेर्ने दिन जेष्ठ पुरुष सदस्यहरुलाई सगुन र पोषण सहित सम्मान गरेकोमा उक्त कार्यको प्रशंसा गर्दै शुभकामना दिएको थियो । संस्थाका अध्यक्ष श्रेष्ठले जेष्ठ नागरिक हाम्रा पथप्रदर्थक, मार्गनिर्देशक भएकोले वहाँहरुको सम्मानमा गतवर्ष देखि नै सिद्धार्थ साकोसले सगुन एवं पोषण वितरण कार्य गरिरहेको जानकारी दिए । अध्यक्ष श्रेष्ठले संस्थाका नियमित बचतकर्ता शेयर सदस्यहरुलाई वार्षिक २ लाख रुपैंया सम्मको दुर्घटना बिमा गरिएको जानकारी दिदैं हाल संस्थामा करीब ४४ प्रतिशत तरलता रहेको र न्युन ब्याजदरमा ऋण प्रवाहको व्यवस्था मिलाएको समेत जानकारी दिए। संस्थाकी अधिकृत मीनु श्रेष्ठले सहजीकरण गरेको कार्यक्रममा संस्थाका उपाध्यक्ष इन्द्रकृष्ण श्रेष्ठले स्वागत मन्तव्य व्यक्त गरेको थियो । कार्यक्रम संस्थाकै भवनमा भएको थियो ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### के देशका नेता कार्यकर्ता नसुध्रने नै हो !

अबको एक महिना पछि नेपालीहरुको महान चाडको रुपमा रहेको दशैं, मोहनी, दशहरालगायतको नाममा नेपालीहरुले आ-आफ्नो स्थान बिशेष र समुदाय बिशेषले मनाउने गर्दछ। नेपाल सरकारले पनि देशमा रहेका विभिन्न जातजाती समुदायले फरक फरक रुपमा मनाउने गरिएपनि दशैं विदाको रुपमा एकमुष्ट विदा दिने परम्परा विगतदेखि नै चलिआएको हो।

तर यही मौकामा नेपाली आम जनताको सामाजिक जनजीवनमा खेलबाड गरेर मुनाफा कमाउने समूहको चलखेल शुरु भएको छ। यही चलखेल रोक्न नेपाल सरकारको केही सरोकारवाला संस्था बजार अनुगमनलगायतको कार्यमा अगाडि आउने गरेको छ। यहाँ अनुगमनहरुका सिलसिलामा नेपाली आम जनमानसको जीवनसँग खेलवाड गरेर नाफा खोज्ने समूहहरुको घिनौना कर्तुतहरु उजागर हुने गरेको छ। तर सरोकारवाला निकाय भने केही जरिवाना र नसिहत दिदै त्यस्ता नाफखोरहरुको कर्तुत माथि मौ रहने गरेको कारण पनि जनताको स्वास्थ्य जस्तो गम्भीर विषयमा पनि खेलवाड गरेर नाफा कमाउने नाफखोरहरुको हौसला बढ्ने गरेको छ। यस्तै ती नाफाखोर व्यापारीहरुको संरक्षणमा सरोकारवाला निकायकै पदाधिकारी, सत्तामा रहेका नेता कार्यकर्ता, राजनीतिक पार्टी र उपभोक्ता हकहितका नाममा गठन भएका संस्थाहरुसमेत संलग्नता रहने गरेको स्वयं व्यापारीहरुकै कथन रहको छ।

अर्को तर्फ नेपालको राजनीतिमा स्थिर सरकार नभएकै कारण पनि देशमा बेथिति र अराजकताले स्थान पाउने गरेको छ। मुख्यतया देशमा रहेका प्रमुख राजनीतिक पार्टीहरुको प्रमुख उद्देश्य नै सत्ता प्राप्त गर्नु हो। सत्ता प्राप्त गर्ने कार्य राजनीतिक दलको लागि सामान्य प्रक्रिया हो। तर नेपालमा जसरी हुन्छ सत्तामा पुग्ने चलखेलले देशमा दुई वा दुई भन्दा बढी दलहरुको अस्वाभाविक गठवन्धनका कारण बन्ने सरकारले देश र जनताको पक्षमा भन्दा पनि दलीय स्वार्थ र पद, प्रतिष्ठा, र शक्तिकै पछि लाग्ने र भावी दिनमा कसरी आफ्नो पद, प्रतिष्ठा र शक्ति प्राप्तका लागि लगानी भएको द्रव्य परिपूर्ति गर्ने योजनामा लाग्दा जनचाहना र देशका लागि आवश्यक पर्ने नीति निर्माणबाट विभुख हुने गरेको छ।

यसरी राजनीतिक दलहरुको नेता कार्यकर्ता जो जनताकै मतबाट निर्वाचित भएका जनप्रतिनिधि भएपनि जनताको हितमा कार्य गर्न सकेका छैनन्। नेपालमा प्रजाचान्त्रिक लोकतन्त्रको स्थापना पछाडि अहिलेसम्म पनि आम जनताले ती राजनीतक दलका नेता कार्यकर्तालाई विश्वास गरेर नै जनप्रतिनिधि बन्न पाइरहेका छन्। तर दलका नेता कार्यकर्तामा जनतासँग अन्य कुनै विकल्प नभएको कारण आउने दिनमा पनि जनताको मत पाउने दम्भ अहिले राजनीतिक दलका नेता कार्यकर्तामा देखिएको छ। जसको कारण पनि नेता कार्यकर्ताहरुको प्रमुख दोहोऱ्याई तेहऱ्याई पदमा पुगिरहने सोचमा अघि बढेको राजनीतिक बिश्लेषकहरुको बुझाई रहेको छ।

यसरी देशमा मौलाउदै गएको विकृतिका विरुद्ध सबैजना जागरुक हुन आवश्यक छ। साथै देशको ठूला भनिएका राजनीतिक पार्टी देखि स-साना पार्टीहरुका नेता कार्यकर्ताहरु पनि अब सही बाटोमा आउन आवश्यक छ। किनकी राज्यका जनताहरुको सुख, सुविधा र तिनको मौलिक हक, अधिकारको रक्षा गर्न सकिएन भने तिनले पनि भोलीका दिनमा ती नेता कार्यकर्ताको सुरक्षा गर्न सक्ने अवस्था आउदैन। जुन अहिले दक्षिण एशियाली मुलुक बंगलादेशका शक्तिशाली प्रधानमन्त्रीका रुपमा तीन दशक लामो समय सत्तामा रहेर पनि अन्तिम समयमा आम जनताले तिनको सुरक्षा गर्न सकेन र अन्ततः देशनै छोडेर विदेश पलायन हुन वाध्य पारिए। यो पाठ बर्तमानमा नेता तथा कार्यकर्ताले सिक्न आवश्यक छ।

# कार्यकर्ता र झोले बहुल देशमा जनविद्रोहको आश नगरौं !

● अर्जुन कार्की

नेपाली कांग्रेस र नेकपा (एमाले)को दुईतिहाइ बहुमत प्राप्त सरकार बनेको झन्डै २ महिना हुँदैछ। विगत १८ महिनामा एउटै दलको एउटै नेताले तीन पटक गठबन्धन फेरेर संसदीय लोकतन्त्रलाई मजाक बनाएपछि उनलाई हटाएर यो सरकारको बनेको हो।

यो सरकार निर्माण गर्ने सहमतिका गर्ने दुई नेता २०४८ सालदेखि कि सत्तामा केन्द्रमा छन् या सत्ताको सहकार्यमा छन्। सत्तापक्ष प्रतिपक्षमा छन्।

यी शेरबहादुर देउवा र केपी शर्मा ओली दुई नेता नेपालको राजनीतिको केन्द्र विन्दुमा रहेको अवधिमा अमेरिकामा ५ जना राष्ट्रपति भएछन् र छैठौं राष्ट्रपतिका लागि निर्वाचन हुँदै छ। यही अवधिमा बेलायतमा ९ जना प्रधानमन्त्री भएछन्। २०४८ (१९९३) मा अमेरिकामा राष्ट्रपति भएर ८ वर्ष सत्तामा रहेका बिल क्लिन्टन सत्ताबाट बर्हिगमन भएको २४ वर्ष भएछ। त्यही समयमा बेलायतमा प्रधानमन्त्री भएका जोन मेजर ७ वर्ष प्रधानमन्त्री भएर सत्ताबाट बहिर्गमन भएको २७ वर्ष भएछ।

भारतमा यही अवधिमा जम्मा ६ जना प्रधानमन्त्री भएछन्। त्यही समयमा भारतमा प्रधानमन्त्री भएका पीभी नरसिंह राव ५ वर्ष प्रधानमन्त्री भएर सत्ताबाट बहिर्गमन भएको २९ वर्ष भएछ।

यो ३३ वर्षको अवधिमा अमेरिका, बेलायत र भारतमा कुनै पनि नेता एकपटक सत्तामा पुगेपछि निर्वाचन हारेर पुनः सत्तामा आएनन्। सत्तामा रहेर आमनिर्वाचनमा हार बेहोरेपछि संसदीय व्यवस्था रहेको बेलायत र भारतका कुनै पनि नेता पुन राजनीतिमा सक्रिय रहेनन्।

हाम्रा २०४८ मा सत्ताको केन्द्रबिन्दुमा रहेका प्रमुख दलका दुई नेताहरू पनि सत्तामा छन्। विसं २०८४ सम्म र त्यसपछि पनि सत्तामा रहन इच्छुक देखिन्छन्।

यी सबै मौकाको फाइदा उठाएर गठजोड र असैद्धान्तिक गठबन्धनको माध्यमबाट प्रधानमन्त्री भएका छन्। कुनैले पनि पूर्ण कार्यकाल (५ वर्ष) होइन, आधि कार्यकाल पनि सरकार चलाउन सकेका छैनन्। यिनको सत्ताको औसत कार्यकाल १ वर्षभन्दा कमको छ।

हालको सरकार पनि कुनै सिद्धान्त र नैतिकताको गठजोडमा बनेको सरकार भने होइन। सरकारको नेतृत्व गर्ने र सरकारमा रहेका कुनै पनि नेता 'अनटेस्टेड' होइनन्। यी सबै पटक-पटक सत्ताको पोखरीमा आहाल मारिसकेका हुन्। जति पटक सत्तामा पुगे पनि जनताले सम्झन लायकको एउटा पनि काम गरेको भन्न सकिने अवस्था छैन। बरु जनतालाई निराश र आक्रोश बनाउने काण्ड भने अनगिन्ती छन्।

यस्तो विगत भएकाले केपी ओलीको प्रधामन्त्रीत्वमा बनेको यो सरकारबाट जनताले खासै आशा गरेका छन् भनेर भन्न सकिने अवस्था थिएन, छैन। र, जनताले सायद केही आश गरेकै नहोलान्।

मेरो भित्री मनले पनि आमजनताको मनले जस्तै यो सरकारबाट खासै आशा राख्न मानिराखेका थिएन। तर, मनमा कता कता एउटा झिनो आशा लागिराखेको थियो - देशको विद्यमान निराशा र आक्रोशलाई बुझेर आफ्नो विगतको गल्तीबाट पाठ सिकेर र अन्य देशको सुशासन र प्रगतिलाई हेरेर यो सरकारले जनताको निराशा र आक्रोशल चिर्न पहिलो दिनबाटै काम गर्ने शैलीमा परिवर्तन गर्छ कि? सरकारको 'भिजन'लाई नवीन भाष्यमा लैजान्छ कि ? यस सरकारले त केही गर्दैछ भन्ने भरोसा दिलाउँछ कि भनेर शंकाको सुविधा दिएको थिएँ।

यो सरकार बनेको करिब २ महिना भयो। प्रधानमन्त्रीको वचन, व्यवहार र कार्यशैली २०७२ साल र २०७४ सालमा जे थियो त्यसभन्दा रत्तिभर फरक देखिँदैन। मन्त्रीहरूले आफूले सम्पादन गर्नुपर्ने काम काबारेमा यसो र उसो गर्नु भनेर कर्मचारीलाई निर्देशन दिएको दिनहुँ समाचार पढ्न र सुन्नमा आइराखेको छ। विनाअर्थको समाचार बन्नु नै सरकारमा जानु र रहनुको अर्थ भएको छ प्रधानमन्त्री र मन्त्रीहरूको।

यो काम गर्ने शैली हामीले २०४८ सालदेखि देखेको हौं। यो काम गर्ने शैलीले देश बन्ने भए उहिले नै देश बनिसकेको हुन्थ्यो। जुन शैलीले कुनै परिणाम दिएको छैन र दिनेवाला पनि छैन तैपनि अर्कै परिणाम ल्याउने आशा गरेर त्यही शैली पटकपटक दोहोऱ्याउनु पागलपन हो। यो पागलपानले देश बन्नेवाला छैन। सबलाई ज्ञात भया।

मैले आजभन्दा अघिको लेखहरूमा लेखिसकें, देशमा रोजगारी सिर्जना गर्न र आर्थिक वृद्धिदर ७ प्रतिशत पुऱ्याउन कलकारखाना, पूर्वाधार विकास र प्रविधिमा जीडीपीको २५-३५ प्रतिशत (१२ देखि १४ खर्ब) लगानी गर्नुपर्छ।

कलकारखाना, पूर्वाधार विकास र प्रविधिमा जीडीपीको २५-३५ प्रतिशत खर्च गर्न राजस्वमा वृद्धि, स्वदेशी पुँजी परिचालन, वैदेशिक लगानी र वैदेशिक ऋणमा अभूतपूर्व वृद्धि गर्न सक्नुपर्छ। तर देशको अवस्था यस्तो छैन। यथार्थ ठीकविपरीत छ।

राजस्व संकलनमा संकुचन आएको छ। भर्खरै अर्थमन्त्री भन्दै थिए - देशको राजस्वले साधारण खर्च (तलब, भत्ता, पेन्सन, सामाजिक सुरक्षा, ऋणको साबाँ ब्याज भुक्तानी, प्रशासनिक खर्च आदि) धान्न सक्ने अवस्था छैन। बैंकमा पैसा जम्मा भएर ब्याजदर भारी कटौती हुँदासमेत पुँजी परिचालित भइरहेको छैन। वैदेशिक लगानी निराशाजनक छ। वैदेशिक ऋणमा वृद्धि हुन त परै जाओस् प्राप्त ऋण समेत खर्च हुन सकिराखेको छैन।

यस्तो अवस्थामा पनि अर्थमन्त्री भन्दै थिए - देशको अर्थतन्त्रले लय लिँदैछ। नाडा (नेसनल अटोमोबाइल डिलर्स एसोसियन) ले आयोजना गरेको 'नाडा सो'ले देशको अर्थतन्त्रले लय लिएको संकेत गर्दैछ भन्ने समाचार पनि प्रकाशित भइरहेको छ।

देशको अर्थमन्त्रीले यो दुई महिनामा एउटा नयाँ नीति र कार्यक्रम जनतासामु प्रस्तुत गर्न सकेका छैनन्। तर, पनि भन्दैछन्- देशको अर्थतन्त्रले लय लिँदैछ। सायद उनको व्यक्तिगत अर्थतन्त्रले लय लियो कि ! त्यसो हुँदैमा देशको अर्थतन्त्रले लय लिएको हुन्छ र ?

नाडा सोमा सयौं गाडीको बुकिङ भएको होला। त्यसैले भनिएको होला नाडा सोले देशको अर्थतन्त्रले लय लिएको संकेत गर्दैछ।

देशमा लगानी भइरहेको होस्। अनगिन्ती कलकारखाना खुलिरहेको होस्। नयाँ नयाँ युवा युवती उद्यमी बनेका हुन्, व्यापार व्यवसायमा संलग्न भएका हुन्। रोजगारी सिर्जना भइरहेको होस्। आयात घटिरहेको होस् र निर्यातमा बढिरहेको होस्। नाडा सोमा गाडी बुकिङ गर्नेहरू ७५ प्रतिशत मध्यम वर्गीय नेपाली हुन्। तब भन्न सकिन्थ्यो देशको अर्थतन्त्रले लय लिँदैछ।

नाडा सोमा गाडी बुकिङ गर्नेहरू ७५ प्रतिशत तिनै ग्राहक छन् जोसँग पहिलेदेखि नै घरमा एक वा एकभन्दा धेरै गाडी छन्। घरमा पहिले नै गाडी हुनेबाहेकका गाडी बुकिङ गर्ने ग्राहकहरू नवधनाढ्य वर्ग (विनालगानी धनी भएका) हरू छन् भन्दा सायद म गलत हुँदिन होला।

देशको अर्थतन्त्र वर्षौंदेखि गतिहीन छ। नागरिकले सरकारबाट कुनै आशा गरिरहेका छैनन्। नागरिक निराश छन्। यो निराशाजनक अवस्थामा नागरिक आक्रोश हुनुपर्ने हो। नागरिकको मन र दिमागमा आगोको ज्वाला दन्केको हुनुपर्ने हो। जनविद्रोहका लागि आतुर भएको हुनुपर्ने हो। तर, त्यो अवस्था देखिँदैन।

देशमा पूराका पूरा शान्ति छ। देशको अवस्था देख्दा लाग्छ - सब ठीक चलिराखेको छ। नागरिक सरकारसँग खुसी छन्। नागरिकको जीवनमा कुनै अभाव छैन, कुनै समस्या छैन। देशको शान्ति देख्दा लाग्छ, रोजगारीको चाहना राख्नेले रोजगारी पाएका छन्, पढ्न चाहनेले चाहेको स्कूल र कलेजमा भर्ना हुनपाएका छन्, स्वास्थ्य उपचार चाहनेले सस्तो र सहज उपचार पाएका छन्, किसानले आफ्नो उपजको उचित मूल्य पाएका छन्, सरकारी निकायबाट पाउनुपर्ने सेवा सहज र सस्तोमा पाइराखेका छन्, नेताहरू देश र जनताका लागि लागिपरिरहेका छन्।

देशको अवस्थाले जनविद्रोह खोजेको छ, नागरिक भने सुषुप्त छन्। देशको अवस्था र नागरिकको मनोभावको बीचमा किन यति धेरै विरोधाभासको अवस्था रहेको होला ?

गतवर्ष श्रीलंका र केही समयअघि बंगलादेशमा जनविद्रोह भयो। दुवै देशमा जनताको जनविद्रोहले निर्वाचित सरकार प्रमुखले देश छाडेर भाग्न पऱ्यो। श्रीलंकाको जनविद्रोह सरकारको नातावाद, कृपावाद र अनियमितताले सिर्जित अर्थतन्त्रले जनताको दैनिक जीवनमा ल्याएको कष्टको विरोधमा भएको थियो।

बंगलादेशको जनविद्रोह भने भिन्न परिस्थितिमा हुन पुग्यो। बंगलादेशको आर्थिक वृद्धिदर ७ प्रतिशतमाथि थियो। बंगलादेशको अर्थतन्त्र विश्वको ३५ औं ठूलो अर्थतन्त्र बनेको थियो। क्रय शक्ति क्षमतामा बंगलादेशको अर्थतन्त्र विश्वको २५ औं ठूलो अर्थतन्त्र बनेको थियो।

यो सब उपलब्धि शेख हसिनाको कार्यकालमा हासिल भएका थिए। तर, पनि नागरिकले उठाएको सानो मुद्दा सरकारले सुन्न नचाहेको आक्रोशमा बंगलादेशमा जनविद्रोह भयो। देशको अर्थतन्त्र बलियो बनाएकी शेख हसिनाले देश छाडेर हिँड्न पऱ्यो। नागरिकले उठाएको मुद्दा सानो होस् कि ठूलो होस् सत्तामा रहेकाहरूले नागरिकको आवाज सुन्न चाहेन भने कुनै पनि देशले बंगलादेशको हबिगत भोग्नुपर्ने हुनेरहेछ।

बेलाबेलामा पढ्न र सुन्न पाइन्छ देशमा श्रीलंका र बंगलादेशमा जस्तो जनविद्रोह हुनुपर्ने किन भइराखेको छैन ? यस्तो जनविद्रोह भइदिए हुन्थ्यो भन्नेमा भने पञ्चायतमा पनि, २०४७ र २०६३ पछिको राजनीतिक व्यवस्थामा पनि लाभ लिएका वर्ग र तिनकै उत्तराधिकारी छन्। तर, आमनागरिक देशको अवस्थासँग निरपेक्ष देखिन्छन्।

हुँदा हुँदा देशको यो अवस्थाको जिम्मेवारी लिनुपर्ने पुष्पकमल दाहाललाई पनि सत्ताबाट बाहिरिनासाथ देशमा श्रीलंका र बंगलादेशको जस्तो जनविद्रोह चाहिएको छ। उनको सदासर्वदा सत्तामा रहने आकांक्षा पूरा नभइरहेकाले नगारिकले जनविद्रोह गरिदिनु परेको छ।

नेपालमा तीसौं वर्षदेखि निरन्तर यति सारो निराशा हुँदा पनि नागरिकको आक्रोश अभिव्यक्त नहुनु र जनविद्रोह नदेखिनुको कारण बुझ्न नेपालको राजनीतिक र सामाजिक परिवेश बुझ्नुपर्ने हुन्छ।

नेपालको राजनीतिक र सामाजिक परिवेश बुझ्न नेपालमा विगत (२००७, २०३६, २०४६, २०६२) मा भएको आन्दोलनको संक्षिप्त विश्लेषण गरिनुपर्छ। यी चारै वटा आन्दोलन सही मानेमा जनविद्रोह थिएनन्। वास्तवमा यी सबै राजनीतिक आन्दोलन थिए। यी सबै आन्दोलन राजनीतिक व्यवस्थाको परिवर्तनका लागि भएका थिए। यी सबै आन्दोलन जसकाविरुद्धमा आन्दोलन भएको हो तिनैसँग सम्झौतामा गएर टुंगिएका थिए।

विसं २००७ सालको राजनीतिक आन्दोलन किताबमा मात्र पढेर जानेको हुँ। तर २०३६, २०४६ र २०६२ सालको परिवर्तन आफैंले देखेको र भोगेको मात्र होइन २०३६ र २०४६ सालको आन्दोलनमा त सहभागी नै भएको हुँ। राजा र पञ्चायतको जयजयाकर गरेर बितेको बाल्यकाल २०३३ सालमा बीपी कोइरालाको नेपाल आगमनपश्चात् २०३४/२०३५ पुग्दा नपुग्दै ममा राजनीतिक चेत पलाउन थालिसकेको थियो। राजनीतिमा चाख लाग्न थालिसकेको थियो।

विसं २००७ सालको आन्दोलन राणा शासनको अन्त्यका लागि थियो। त्यस समयमा जति राजनीतिकरूपमा जागरुक थिए ती प्रायः नेपाली कांग्रेसमा आबद्ध थिए। आमनागरिक निरपेक्ष नै थिए भन्ने लाग्छ।

आन्दोलनलाई दिल्ली सम्झौतामा लगेर टुंगाइयो। विसं २००७ सालको आन्दोलनले राणाको सत्तालाई तत्काल समाप्त पारेन। राणा शासनको अन्त्यको लक्ष्य राखेर गरिएको आन्दोलन राणा नेपाली कांग्रेसको सरकार बनाउँदै आन्दोलनको नेतृत्व गर्ने प्रमुख दललाई सत्ताको साझेदारी बनाएर टुंगियो। त्यसैले २००७ सालको आन्दोलन जनविद्रोहभन्दा पनि राजनीतिक आन्दोलन बन्न पुग्यो।

विसं २०३६ सालको आन्दोलन विद्यार्थीले गरेका आन्दोलन थियो, पञ्चायती व्यवस्था विरोधी आन्दोलन थियो। त्यस आन्दोलन राजनीतिक दलका भातृ संगठनको रूपमा रहेका विद्यार्थीहरूको संगठनले गरेको हो। यो आन्दोलन पञ्चायतको अन्त्य चाहनेहरूले गरेका थिए। आन्दोलन सफल भयो तर आन्दोलनको माग नै नभएको जनमत संग्रहमा गएर आन्दोलनले विश्राम लियो। विसं २०३६ सालको आन्दोलन त सही अर्थमा राजनीतिक आन्दोलन पनि बन्न सकेन।

विसं २०४६ सालको आन्दोलन पञ्चायतविरोधी आन्दोलन थियो। उक्त आन्दोलन राजनीतिक दलका कार्यकर्ता र ती दलका दलका भातृ संगठनको रूपमा रहेका विद्यार्थीहरूको संगठनले गरेको हो। आन्दोलनको अन्तिम चरणमा आमनागरिकको पनि सहभागिता रह्यो। यो आन्दोलनले लक्ष्य प्राप्ति गऱ्यो, पञ्चायतको अन्त्य भयो। विसं २०४६ सालको आन्दोलन पनि जनविद्रोहभन्दा राजनीतिक आन्दोलनकै स्वरूपमा रह्यो।

विसं २०६२/०६३ सालको आन्दोलन राजा ज्ञानेन्द्रको तानाशाहीविरुद्धमा थियो। आन्दोलन राजनीतिक दलका कार्यकर्ताले नै आरम्भ गरेको भए पनि अन्तिम चरणमा जनताको समेत सहभागिता रह्यो। यो आन्दोलनले लक्ष प्राप्ति गऱ्यो। राजा ज्ञानेन्द्रको तानाशाहीको समाप्ति भयो।

विसं २०६२ सालको आन्दोलन भने राजनीतिक व्यवस्थाको परिवर्तनका लागि थिएन। राजा ज्ञानेन्द्रको तानाशाहीको विरुद्धमा थियो। यस आन्दोलनले २४० वर्षको राजतन्त्रको अन्त्य गरिदियो। त्यस मानेमा २०६२/०६३ सालको जनआन्दोलनलाई जनविद्रोहको रूपमा परिभाषित गर्न सकिन्छ।

समाजमा कुनै विसंगति हटाउन समाजमा खास संख्यामा मानिस सक्रिय हुनुपर्छ। देशमा कुनै व्यवस्था वा सत्ताविरुद्धमा आन्दोलन वा जनविद्रोह गर्न र सफल बनाउन पनि खास संख्यामा मानिसको सहभागिता चाहिन्छ। यस्तो खास संख्यालाई 'क्रिटिकल मास' भनिन्छ। सामान्यतया 'क्रिटिकल मास'ले एक तिहाइ संख्यालाई जनाउँछ। यो विज्ञानले प्रमाणित गरेको तथ्य हो।

बाँकी पेज ५ मा

# गट्ठाघर दुर्घटनामा ट्राफिक प्रहरीको गल्ती छैन

भक्तपुर । भक्तपुरको मध्यपुर थिमि-३ गट्ठाघरमा गत साउन ३१ भएको सवारी दुर्घटनाको सम्बन्धमा अध्ययन गर्न गठित समितिले सो दुर्घटनामा ट्राफिक प्रहरीको गल्ती कमजोरी नभएको निष्कर्ष निकालेको छ ।

प्रमुख जिल्ला अधिकारी रोशनी कुमारी श्रेष्ठको निर्णयले गठन गरिएको सहायक प्रमुख जिल्ला अधिकारी डोरेन्द्र निरौला संयोजक रहेको समितिले करिव १० दिन लामो अध्ययन र छानविनपछि सो घटनामा ट्राफिक प्रहरीको गल्ती कमजोरी नभएको निष्कर्ष निकालेको हो ।

यसअघि नेपाल प्रहरीको उपत्यका प्रहरी कार्यालयले गठन गरेको छानविन समितिले पनि सो दुर्घटनामा ट्राफिकको कमजोरी नभएको र उक्त घटनामा ट्रक चालकले पनि स्कुटरलाई नदेख्दा दुर्घटना भएको निष्कर्ष निकालेको थियो ।

ट्राफिक प्रहरीको सवारी जाँच भइरहेको समयमा सो दुर्घटना भएको थियो । काठमाण्डौंबाट भक्तपुरतर्फ आउँदैं गरेको ना ६ ख २१७३ नम्बरको मालबहाक ट्रकको ठक्करले बा ३९ प ८९४४ नम्बरको स्कुटर चालक ओखलढुंगा चिशंखुगढी गाँउपालिका-४ खहरे घर भई हाल काठमाण्डौंको कपनस्थित सरस्वतीनगर बस्ने ६५ वर्षीय उत्तम कोईरालाको घटनास्थलमा नै मृत्यु भएको हो । दुर्घटनामा पछि आक्रोशित सर्वसाधरणले ट्राफिक प्रहरीको सवारी जाँचका कारण दुर्घटना भएको भन्दै ड्युटीमा रहेका ट्राफिक प्रहरीमाथि आक्रमण गरेका थिए । सामाजिक सञ्जालहरुमा पनि ट्राफिक प्रहरीप्रति आक्रोश पोखेका थिए ।

विशेष गरी ट्राफिक प्रहरीप्रतिको जनआक्रोश र ट्राफिक प्रहरीको सवारी जाँचका विषयमा धेरै टिका टिप्पणी भएपछि गृहमन्त्री रमेश लेखकको निर्देशनमा नेपाल प्रहरी र जिल्ला प्रशासन कार्यालय भक्तपुरले छुट्टाछुट्टै छानविन र अध्ययन समिति गठन गरेको थियो ।

सोही अनुसार प्रजिअ श्रेष्ठले सहायक प्रजिअ निरौलाको संयोजकत्वमा जिल्ला प्रहरी परिसर भक्तपुरका सूचना अधिकारी प्रहरी नायव उपरिक्षक राजन कार्की, यातायात व्यवस्था विभाग सवारी चालक अनुमति पत्र कार्यालय राधेराधेका मेकानिकल ई. उत्तम बस्नेत र नागरिक समाजका तर्फबाट पिडितका नातेदार समेत रहनुभएका तुलसीहरी कोइराला सहितको घटना सत्य तथ्य अध्ययन समिति गठन गरेको थियो ।

सो समितिले ८ पृष्ठको अध्ययन प्रतिवेदन बिहिवार प्रजिअ श्रेष्ठलाई बुझाएको छ । प्रजिअ श्रेष्ठले तत्कालै उक्त प्रतिवेदन गृहमन्त्रालयमा पठाएको स्रोतले जानकारी दिए ।

समितिले घटनास्थलको सीसीटिभी फुटेज, सामाजिक सञ्जालमा आएका भिडियो, ट्रकको अवस्थालगायतको अध्ययन एवम् प्रत्यक्षदर्शी, ट्रक चालक, सवारी जाँचका क्रममा ड्युटीमा रहेका ट्राफिक प्रहरीसँग समेत सोधपुछ गरी प्रतिवेदन तयार गरिएको प्रतिवेदनमा उल्लेख छ ।

अध्ययनका क्रममा ट्राफिकले दुर्घटनामा परेका दुबै सवारीलाई रोकेको नदेखिएको, सीसीटीभी फुटेज र प्रत्यक्षदर्शीलाई सोधपुछ गर्दा समेत दुर्घटनामा ट्राफिक प्रहरीको भूमिका नदेखिएको प्रतिवेदनमा उल्लेख गरिएको छ ।

'सीसीटीभी फुटेजमा दुर्घटनास्थल नजिकै ३ जना ट्राफिक प्रहरी ड्युटी गरिरहेको देखिन्छ। सोही क्रममा काठमाडौंबाट भक्तपुरतर्फ जाँदै गरेको ट्रकले आफूभन्दा अघि रहेको स्कुटरलाई ठक्कर दिएर अघि बढेको देखिन्छ। सडकमा रहेका ३ जनामध्ये एक जना ट्राफिक प्रहरी दौडिंदै ट्रकतर्फ अघि बढेको देखिन्छ । लगत्तै ट्रक रोकिन्छ र एक व्यक्ति ट्रकबाट ओर्लिएको देखिन्छ', प्रतिवेदनमा भनिएको छ।

प्रतिवेदनमा ट्रकका चालक सर्लाही मलंगवा नगरपालिका-२ का ३२ वर्षीय सतेन्द्र श्रेष्ठसँग समितिले गरेको सोधपुछका क्रममा चालकले स्कुटर नदेखेको र दुर्घटना गराउने कुनै मनसाय नै नरहेको बयान दिएको उल्लेख छ । दुर्घटना गराउने मनसाय नदेखिए पनि ट्रक चालककै कमजोरीले दुर्घटना भएको प्रतिवेदनमा उल्लेख छ ।

समितिले मेकानिकल इन्जिनियरको सहयोगमा ट्रकको प्राविधिक जाँच समेत गरेको थियो । त्यसक्रममा ट्रकको अवस्था भने ठीक रहेको पाएको प्रतिवेदनमा उल्लेख छ। ट्रकको बत्ती, ब्रेकदेखि अन्य पार्टपूर्जा समेत ठीक रहेको र कर तिरेकोदेखि चालकको लाइसेन्स रहेको, चालकले कुनै किसिमको मादक पदार्थ सेवन नगरेको पाईएको प्रतिवेदनमा उल्लेख छ ।

समितिले दुर्घटनास्थलबाट ट्रक चलाएर सुरक्षित ठाउँमा पुऱ्याएका प्रहरीसँग समेत ट्रकको अवस्थाबारे सोधपुछ गरेको प्रतिवेदनमा उल्लेख छ ।

समितिले ट्राफिक प्रहरीको सवारी जाँचलाई थप वैज्ञानिक बनाउन र काठमाण्डौं भक्तपुर ६ लेन सडकको ट्राफिक व्यवस्थापन थप व्यवस्थित बनाउन पनि सुझाव दिएको छ ।

समितिले मूख्य सडकमा सवारी जाँच गर्दा कम्तीमा एक सय मिटर अगाडी प्रष्ट रुपमा देखिने गरी सवारी जाँचको संकेत वा बोर्ड राख्न, ट्राफिक जाँच तथा अनुगमनलाई वैज्ञानिक बनाउन एआईको प्रयोगदेखि स्थान विशेषमा फरक-फरक प्रकृतिको जाँच हुनुपर्ने सुझाव दिएको छ ।

यसैगरी काठमाण्डौं भक्तपुर ६ लेन सडकको सर्भिस लेनमा दुई पाङ्गे सवारीसाधन चलाउन पनि सुझाव दिएको छ ।

प्रतिवेदनमा मृतकका परिवारलाई उचित क्षतीपुर्तीको व्यवस्था गर्न सुझाव दिएको छ । क्षतपुर्ती सम्बन्धी कानूनी व्यवस्था भएपनि मृतकको परिवारको आर्थिक अवस्था, दुर्घटनाको प्रकृति समेतलाई मध्यनजर गर्दै पिडित परिवारलाई उचित क्षतीपुर्तीको व्यवस्था गर्नुपर्ने उल्लेख छ ।

## कार्यकर्ता......

विसं २००७ सालमा राणाको विरोधमा सक्रिय नागरिकको संख्या, २०३६ साल र २०४६ मा पञ्चायतको विरोधमा सक्रिय नागरिकको संख्या, र २०६२-०६२ सालमा राजा ज्ञानेन्द्रको तानाशाही शासनको विरोधमा सक्रिय नागरिकको संख्या 'क्रिटिकल मास' भन्दा बढी थियो । त्यसैले ती चार वटा आन्दोलन सफल भए । श्रीलंका र बंगलादेशमा भएको जनविद्रोहमा पनि 'क्रिटिकल मास' बराबरको नागरिकको सक्रिय सहभागिता रह्यो । त्यहाँको जनविद्रोह सफल भयो । सत्ताको शिखरमा रहेकाहरू देश छाडेर भाग्न बाध्य भए ।

नेपालमा राजनीतिक दल आंशिकरूपमा २०३६ सालपछि र खुलारूपमा २०४७ पछि सक्रिय भएका हुन् । यो करिब ३५ वर्षको अवधिमा २०६०/६२ लाई छाडेर यी नै दल र दलका नेता सत्तामा रहेका छन् । यो ३५ वर्षको अवधिमा देशले कुनै गति लिन सकेन । देश गरिब र पिछडिएको श्रेणीमा रहेको छ ।

पैतीस वर्षअघि नेपाल समान रहेको देशहरूसँग तुलना गर्दा हाम्रो अवस्थाले हामीलाई लज्जाबोध गराउँछ । त्यस समयमा हामी र हामीभन्दा अघि रहेका देशहरूसँगको असमानता र ती देशसँगको अहिलेको असमानता तुलना गर्दा त्यो असमानता कैयौं गुणाले बढेको छ । बेला बेलामा नेताहरू भन्छन् - जसरी देश बिग्रिएको भाष्य बनाउन खोजिएको छ देश त्यस्तो छैन । हामीले देश बनाएको छौं भन्न हिचकिचाउँदैनन् । नेताहरू पञ्चायतको समयको विकासको सूचकांकसँग तुलना गरेर यति किमी सडक बन्यो, यति विद्युत् उत्पादन भयो, खानेपानीमा यति जनसंख्याको पहुँच पुग्यो, यति शिक्षण संस्था थपियो, यतिको हातमा मोबाइल पुग्यो, जिडीपी यति पुग्यो, प्रतिव्यक्ति आय यति पुग्यो, मातृ तथा शिशु मृत्युदर यति घट्यो, औसत आयु यति पुग्योजस्ता सतही कुरा गरेर देश बनेको दलिल दिने गर्छन् । यो त समयक्रमको विकासले ठेलेर पुऱ्याएको तथाकथित विकास हो ।

एउटा कुपोषणमा परेको बच्चाको पनि निश्चित मात्राको उचाइ बढ्छ । पञ्चायतको समयको विकासको सूचकांकसँग तुलना गरेर अहिलेको अवस्थालाई विकास भएको भन्नु भनेको कुपोषणमा परेको बच्चाको उचाइ बढेको देखेर मेरो बच्चालाई पोषणयुक्त खाना खुवाएको छु भनेर बाबुआमा निश्चिन्त हुनुजस्तै हो ।

यो ३५ वर्षमा यी राजनीतिक दल र दलका नेताहरूले देश बनाएनन् । नागरिक अभाव र असुविधामा बाँचिरहेका छन् । तर यही अवधिमा यी राजनीतिक दल र दलका नेताहरूले एउटा अभूतपूर्व काम भने गरेका छन् । विश्वविद्यालयका प्राध्यापक हुन् कि विद्यालयका शिक्षक हुन् कि राष्ट्रसेवक (सही मानेमा जागिरे) , मजदुर, किसान, विद्यार्थी हुन् सबैलाई राजनीतिक दलको कार्यकर्ता र झोले भने बनाउन सफल भएका छन् ।

देशमा गरी खाने वातावरण भएन । देशमा बसेर जाहन परिवारको लालनपोषण गर्न सकिने भएन र राजनीतिक दलको झोले बन्न पनि नसकेर देशका लागि चाहिने पौरखी हात अरू देशको निर्माणमा लगाउन देश छाडेर हिँडे । प्रत्येक दिन औसत दुई हजार युवायुवतीले देश छाड्छन् । विडम्बना त यसरी देश छाडेर हिँडेका पनि विदेशमा यी नै दलको झोलेको रूपमा संगठित भएको मैले आफैँले देखेको छु ।

जनविद्रोहका लागि 'क्रिटिकल मास' बराबरको नागरिकको सक्रियता चाहिन्छ । जसरी यी राजनीतिक दल र नेताले सबै तह र तप्काका नागरिकलाई कार्यकर्ता र झोले बनाउन सफल भएका छन् यिनको विरोधमा जनविद्रोह गर्ने ' क्रिटिकल मास' बराबरको स्वतन्त्र नागरिक नै छैनन् देशमा । देशको अवस्थाले जति सुकै जनविद्रोहको वातावरण बनेको होस्, संसारको जुन सुकै देशमा जनविद्रोह होस्, नेपालमा 'क्रिटिकल मास' बराबरको सक्रिय नागरिकको अभाव छ । त्यसैले नेपालमा हालको अवस्थामा जनविद्रोहको वातावरण छैन ।

अब देशमा राजनीतिक आन्दोलन हुनेछैन । व्यवस्था परिवर्तनका लागि नागरिकले आवाज उठाउनेछैनन् । अब जनताले आवाज उठाए भने देशमा रोजगारीको माग राखेर, सुलभ स्वास्थ्य र शिक्षाको माग राखेर, देशमा सुशासनको माग राखेर, सुलभ सार्वजनिक यातायातको माग राखेर, स्वच्छ वातावरणको माग राखेर, महंगीको विरोधमा आवाज उठाउनेछन् ।

जुन दिन नागरिकमा दलको कार्यकर्ता र झोले होइन स्वतन्त्र नागरिक हुने चेत आउनेछ तब यस्तो विरोधको आवाजले जनविद्रोहको स्वरूप लिनेछ । तर त्यो दिन कति छिटो वा ढिलो आउला समयले मात्र बताउनेछ । (लेखक नेपाल सरकारका पूर्वसचिव हुन्)

बाह्रखरीबाट

## हामीलाई स्वस्थ बनाउने साधारण नियम

'भोक मीठो कि भोजन ?' नि:सन्देह 'भोक' । भोक लागेको बेला रुखोसुखो खानेकुरा पनि स्वादिलो लाग्छ । तर भोक नै छैन भने ? चौरासी व्यञ्जन पनि खल्लो लाग्छ । ओछ्यान राम्रो कि निद्रा ? पक्कै पनि निद्रा । निद्रा लागेपछि जस्तो ओछ्यान पनि सहज लाग्छ । तर निद्रा नै लागेन भने ? सुनको पलङ्गमा सुतेपनि केही लाभ हुन्न ।

यसको अर्थ भोजन भन्दा भोक जरुरी छ । ओछ्यान भन्दा निद्रा । सही समयमा भोक लाग्नु, सही समयमा निद्रा लाग्नु, सही समयमा दिसापिसाब लाग्नु, खाएको पच्नु, शरीर फूर्ति हुनु, जाँगर चल्नु, खुसी महसुस हुनु स्वस्थ शरीरको सूचक हुन् ।

हामीले प्राप्त गर्ने भौतिक सुख-सुविधा भन्दा बढी महत्वपूर्ण छ, स्वस्थ शरीर । शरीर नै रोगी भए जतिसुकै सुविधाले पनि सुख दिँदैन । त्यसो भए स्वस्थ्य शरीरका लागि के गर्ने त ? यहाँ ३१ वटा साधारण नियम उल्लेख गरिएको छ, जो हामी पालना गर्न सक्छौं ।

१. मीठो तर सन्तुलित खाना

शारीरिक स्वास्थ्यको पहिलो सर्त हो, सन्तुलित अनि स्वस्थकर खाना । खाना खाइरहँदा त्यो स्वादिलो त हुनुपर्छ नै साथै पोषिलो पनि । किनभने शरीरलाई स्वस्थ, तन्दुरुस्त, दीर्घायु राख्ने प्रमुख भूमिका खानाको हुन्छ । यदि खानालाई सही ढंगले, सही समयमा, सही मात्रामा खाइयो भने औषधि खानै पर्दैन ।

खराब खानपान त्यागौं र सन्तुलित, पोषिलो अनि सुपाच्य खाना खाने गरौं ।

२. पर्याप्त निद्रा

मस्त निद्रा शारीरिक स्वास्थ्यको प्राथमिक सूचक हुन् । दिनभर हामी काम गर्छौं, खान्छौं, हिंड्छौं, बोल्छौं, सोच्छौं । यावत् क्रियाका लागि शरीरका भित्री अंगहरुले काम गरिरहेको हुन्छ । जब हामी सुत्छौं त्यसबेला भने शरीरले आफ्नै मर्मत वा उपचारको काम गर्न थाल्छ । विश्रामको अवस्थामा शरीरभित्रको उपचारात्मक संयन्त्र सक्रिय हुन्छ, जसले हाम्रो शरीरलाई सम्भावित रोगव्याधिबाट मुक्त राख्छ ।

गहिरो वा पर्याप्त निद्राका लागि निश्चित समय तालिका अपनाउनु उत्तम हुन्छ ।

३. योग, ध्यान र व्यायाम

तन्किनु, उफ्रिनु, हिंड्नु, दौडिनु जस्ता शारीरिक गतिविधिले रक्त प्रवाह र श्वासप्रश्वासलाई सहज बनाउने, जोर्नी र मांसपेशीलाई लचिलो बनाउने, हड्डीलाई बलियो बनाउनेदेखि पाचन यन्त्रलाई चुस्त बनाउनसम्म भूमिका खेल्छ ।

बिहान खाली पेटमा व्यायाम गर्नु सर्वोत्तम मानिन्छ । व्यायाम एउटै गति वा तीव्रताका साथ निरन्तर ३५-४० मिनेटसम्म गर्नु उचित हुन्छ । यससँगै योग, ध्यान जस्ता गतिविधिले शारीरिक तथा मानसिक स्वास्थ्यमा लाभ पुग्छ ।

दिनभर काममा रहँदा शरीरलाई गतिशील राख्न जरुरी हुन्छ । केही न केही शारीरिक गतिविधि गर्नुपर्छ ।

४. शौच त्याग

बिहान उठेपछि निश्चित समयमा शौच त्याग गर्नु जरुरी हुन्छ । हामीले दिनभर खाएका खानेकुराबाट पोषकतत्व शरीरले लिन्छ र अन्य विकार दिसा, पिसाबको माध्यमबाट बाहिर निकाल्छ । त्यसैले स्वस्थ्य शरीरका लागि पोषिलो खानु जति जरुरी छ उत्ति नै शौच त्याग पनि महत्वपूर्ण छ ।

५. तौल सन्तुलित राखौं

शरीर उचाई अनुसार कति तौल हुनुपर्छ भन्ने एउटा स्वास्थ्य मानक तयार गरिएको छ । सोही अनुसार आफ्नो उचाई अनुरुपको तौल कायम राख्नु जरुरी छ ।

तौल सन्तुलित राख्न खानपान, जीवनशैली, निद्रा आदिको मुख्य भूमिका हुन्छ । ताजा र सुपाच्य खानपान, सक्रिय जीवनशैली र पर्याप्त आरामले तौल सही राख्न मद्दत गर्छ ।

६. चुरोट, रक्सी त्यागौं

चुरोट, रक्सी, खैनी, गुट्खा जस्ता चीज स्वास्थ्यका लागि हानिकारक छ । स्वस्थ जीवनशैली अपनाउन यी कुराहरु त्याग्नैपर्छ । यसले मुख, दाँत, पाचन, रक्तसञ्चार, फोक्सो सबैतिर नराम्रो असर गर्छ । हड्डी कमजोर बनाउनेदेखि क्यान्सरको जोखिम बढाउनेसम्मका तत्व यिनै हुन् ।

७. शारीरिक सरसफाइमा ध्यान

शरीरलाई हानि गर्ने कतिपय जीवाणुहरु फोहोर र फोहोरी शरीरबाट फैलिने गर्छ । त्यसैले शरीरलाई स्वच्छ र सफा राख्न पनि उत्तिकै जरुरी छ । सम्भव भएसम्म दिनहुँ नुहाउनु उत्तम हुन्छ । खाना खानेबेला राम्ररी हात धुनुपर्छ । यी सामान्य कुरा हुन्, तर स्वास्थ्यका लागि अति महत्वपूर्ण छन् ।

८. खुसी र आनन्दित मन

मनको उथलपुथलले शरीरको क्रियालाई सोझो असर गर्छ । रिस, कुण्ठा, गुनासो, दु:ख, अत्यास जस्ता कुराले जसरी मनलाई मात्र होइन शरीरलाई पनि पिरोल्छ, त्यसैगरी खुसी, उमंग, आनन्दले शरीरलाई स्वस्थ राख्न भूमिका खेल्छ । तनाव, चिन्ता जस्ता मनोविकारलाई व्यवस्थापन गरेर मनलाई आनन्दित भावमा राख्नु जरुरी छ ।

निष्कर्ष

स्वस्थ शरीरमा नै स्वस्थ मस्तिष्को निवास हुन्छ भनिन्छ । निरोग शरीर आफैंमा सर्वोत्तम उपहार हो । शरीर स्वस्थ भए सबै कुरा सहज लाग्छ । सुन्दर लाग्छ । र, शरीरलाई स्वस्थ राख्न न अतिरिक्त खर्च गर्नुपर्छ, न कुनै लगानी नै । यसका लागि एउटै सर्त हो, अनुशासित जीवनशैली ।

एजेन्सीको सहयोगमा

थिमि TIMES



# सयौं बाजा एउटै ताल, सयौं कलाकार एउटै चाल




काठमाडौं । केन्द्रीय मानन्धर संघले काठमाडौंको आयोजनामा बृहत् धाः बाजा प्रदर्शनी ११४४ सम्पन्न गरेको छ। बसन्तपुरमा सम्पन्न सो प्रदर्शनी मौलिक बाजा संरक्षण तथा प्रवर्द्धन गर्ने उद्देश्यले संघले केही वर्ष यतादेखि काठमाडौं महानगरपालिकासँगको सहकार्यमा स युवा पुस्तामार्फतको सहभागीता मा सम्पन्न भएको हो । मरु गणेशस्थानको पछाडि अवस्थित माजु देगःको खुड्किलामा उभिएर सयौं कलाकारहरुले एकै पटक, एउटै चालमा सयौं बाजा बजाएको हो ।

'मानन्धर समुदायको सघन बसोबास रहेका विभिन्न टोल मध्ये काठमाडौंका ८ वटा टोलबाट बाजा प्रदर्शनीमा सहभागी थिए ।' कार्यक्रम संयोजक सन्देश मानन्धरले बताए । कार्यक्रममा लाय्कूसाः मानन्धर समाज, भिंद्यः गुथि कालिमाटी, चस्वांद्व मानन्धर सनाःगू खलः, थँहिटी मानन्धर गुथि, दैसाः टोल मानन्धर समाज, न्यागःमणि फेदी मानन्धर संघ, मानन्धर सनाःगू खलः न्हूसाः तथा पाक्व पुखूद्यां सनाः खलःबाट आठआठ जना कलाकार सहभागी गराएको प्रदर्शनीमा १५ जना व्यावसायिक म्यूजिकल अर्केस्ट्राका कलाकारले साथ दिएको उहाँले जनाए ।




कार्यक्रमलाई सम्बोधन गर्दै काठमाडौं महानगरपालिकाकी उप मेयर सुनिता डंगोलले मानन्धर समाजले बाजा संरक्षणमा दिंदै आएको योगदानलाई प्रशंसा गरिन् । एउटा फरक प्रसङ्गमा डंगोलले सामाजिक र सांस्कृतिक परम्परालाई निरन्तरता दिंदै आएका खलः, पुचः र गुठीको लागि चालू आ.व.मा महानगरले यथोचित बजेट विनियोजन गर्न नसकेको स्वीकार गरिन् । मेयर बालेन शाहप्रति इँगित गर्दै उप मेयर डंगोलले महानगरबासीकै करको योगदानबाट निर्माण भएको बजेटमा थुप्रै संघसंस्थाको अधिकार विमुख भएको बताइन् । हुन पनि आ.व. २०८१-८२ को बजेटमा केन्द्रीय मानन्धर संघ, उदाय समाज, बज्राचार्य समाज, सिस्य समाज लगायतका थुप्रै सामुदायिक संस्थाको कार्यक्रम शिर्षक कटौती भएको छ । गत वर्ष विनियोजित बजेटलाई चालू आ.व.मा निरन्तरता दिने सवालमा मेयर शाह र कार्यपालिकाका अन्य सदस्यहरुबीच असमझदारी सिर्जना भएको बताइएको छ ।

चस्वांद्व मानन्धर सनाःगू खलःका सचिव उत्तम मानन्धरले सञ्चालन गरेको कार्यक्रममा काठमाडौं महानगरपालिकाकी डेपुटी मेयर सुनिता डंगोल, महानगरकै प्रवक्ता नवीन मानन्धर, जनसेवा प्रहरी प्रमुख, विभिन्न बाजा खलःका गुरुहरु तथा हजारौं दर्शकहरु सहभागी थिए ।

कार्यक्रमको लागि बाजा प्रशिक्षकः त्रिरत्न मानन्धर

बाजा प्रदर्शनीमा सहभागी भएको टोल/बाजा समूह तथा संयोजकहरुको विवरणः

१) लाय्कूसाः मानन्धर समाज (प्रतिनिधि, सानुबाबु मानन्धर), २) भिंद्यः गुथि कालिमाटी (प्रतिनिधि, जगदीश मानन्धर), ३) चस्वांद्व मानन्धर सनाःगू खलः (प्रतिनिधि, उत्तम मानन्धर), ४) थँहिटी मानन्धर गुथि (प्रतिनिधि, गौतम मानन्धर) ५) दैसाः टोल मानन्धर समाज (प्रतिनिधि, सन्देश मानन्धर), ६) न्यागःमणि फेदी मानन्धर संघ (प्रतिनिधि, पुष्प मानन्धर), ७) मानन्धर सनाःगू खलः न्हूसाः (प्रतिनिधि, कृष्ण बहादुर मानन्धर) र ८) पाक्वः पुखूद्यां सनाः खलः (प्रतिनिधि, बाबुराम मानन्धर) समुह रहेको छ ।

# सुन्दर हस्तलिखित अक्षर बनाउन मिल्ने नेपाली एप सार्वजनिक




काठमाडौं । क्यालिग्राफी सिक्न चाहनेका लागि 'लेट्स कलर क्यालिग्राफी' (ीभतक ऋयियच ऋबीष्निचबउजथ) नामक एप सार्वजनिक भएको छ। शनिबार क्यालिजात्रा र नेपाल क्यालिग्राफीद्वारा आयोजित 'नेपाल क्यालिग्राफी फेस्टिवल २०२४' को अवसरमा एप सार्वजनिक गरिएको हो ।

काठमाडौं महानगरपालिकाकी उपप्रमुख सुनिता डङ्गोल र क्यालिजात्रा संस्थाका अध्यक्ष आनन्दकुमार महर्जनले लाइभ क्यालिग्राफी गरेर एपको औपचारिक सुरुवात गरे । नेपाली लिपि र अक्षर कलालाई डिजिटल माध्यमबाट सिक्न र अभ्यास गर्न चाहनेहरूका लागि यो एप उपयोगी हुने महर्जनले बताए ।

विज्ञान प्रजापतिको नेतृत्वमा एप 'बौचा ओ मैचा' नामक युवाको संगठनले यो एप विकास गरेको हो । एपमा उपलब्ध नेपाली लिपि, अक्षर डिजाइन र कलात्मक शैलीले प्रयोगकर्तालाई नेपाली क्यालिग्राफीको क्षेत्रमा आफ्नो सीप सुधार्न सहयोग पुग्ने विश्वास लिइएको छ ।

अहिले यो एप एन्ड्रोइडमा मात्र उपलब्ध छ । एप डाउनलोड गर्न यहाँ क्लिक गर्नुहोस् ।

एप डाउनलोड गरिसकेपछि 'ब्ल्याङ्क' र 'प्राक्टिस' मोड गरी दुई ओटा अप्सन देखिन्छ । त्यसमध्ये ब्ल्याङ्क पेज छानियो भने खाली क्यान्भास खुल्छ । त्यसमा आफूलाई उपयुक्त साइज छान्नुपर्ने हुन्छ । त्यसपछि कलर, पेन स्टाइल छानी आफूले चाहेको नेपाली अक्षर लेख्न सक्नुहुन्छ । क्यालिग्राफीमा कुन अक्षर कस्तो हुन्छ, अनि कसरी लेख्ने भनेर एपबाटै जानकारी लिन मिल्छ ।

त्यस्तै प्राक्टिस मोडमा रञ्जना लिपि, ल्याटिन र नेपाल लिपि गरी तीन स्टाइलका अक्षरको अभ्यास गर्न सकिन्छ ।

'बौचा ओ मैचा'ले सार्वजनिक गरेको यो पाँचौं एप हो । यसअघि पनि उक्त संस्थाले कलर गर्ने तथा अक्षर सिक्ने एपहरू ल्याएको थियो ।

# पारा ओलम्पिकमा पलेशालाई सफलता



काठमाडौं। नेपाली खेलकुदका धेरै विधा विश्वस्तरीय प्रतियोगितामा सहभागिताका लागि मात्र प्रस्तुत भइरहेको समयमा पारा तेक्वान्दोले भने सार्थकता दिलाएको छ । त्यसैको उपज पेरिसमा जारी पारा ओलम्पिक (पारालिम्पिक) मा नेपालले कास्य पदक जितेको छ। नेपाली तेक्वान्दो खेलाडी पलेशा गोबर्द्धन श्रेष्ठले पेरिस पारालिम्पिक २०२४ मा कास्य पदक जितेकी हुन् । के-४४ क्याटगोरीअन्तर्गत महिला ५७ केजीमुनि तौल समूहमा शुक्रबार भएको प्रतिस्पर्धामा सर्बियाकी मारिजा मिचेभलाई १५-८ ले हराउँदै पलेशाले कास्य पदक जितेकी हुन् । योसँगै पारालिम्पिकमा पदक जित्ने उनी पहिलो नेपाली खेलाडी बनेकी छिन् ।

सेमिफाइनलमा पलेशा शीर्ष वरीयताकी खेलाडी ब्राजिलियन सिल्भाना मायारा कार्डोस फरनान्डेजसँग १०-८ ले पराजित भएकी थिइन् । उनले क्वार्टरफाइनलमा भेनेजुएलाकी भलेरिया मोराल्सलाई ३१-० को फराकिलो अन्तरमा पराजित गरेकी थिइन् । दोस्रो चरणमा पराजित भएका कारण उनले रिपाचेजमा मौका पाएकी थिइन् । रिपाचेजमा फ्रान्सकी सेफी कार्भजनलेलाई २-१ ले पराजित गर्दै उनी कास्य नजिक पुगेकी थिइन् ।

गत चैतमा चीनको ताइवानमा भएको पारालिम्पिकको एसियाली छनोट प्रतियोगितामा उनले स्वर्ण जितेकी थिइन् । उनी चीनमा भएको १९औं एसियाली खेलकुदकी पनि ऐतिहासिक कास्य पदक विजेता हुन् ।

नेपालले सन् २००४ को एथेन्ज पारा ओलम्पिकदेखि पारालिम्पिकमा सहभागिता जनाउन थालेको हो । १० वर्षको उमेरदेखि तेक्वान्दो खेल्न थालेकी पलेशा २०१६ मा पारा राष्ट्रिय टिममा आबद्ध भएकी थिइन् । त्यसयता उनले विभिन्न अन्तर्राष्ट्रिय प्रतियोगितामा सहभागिता जनाइसकेकी छिन् । पारा तेक्वान्दो, जोर्डनमा २०१९ मा भएको पाँचौं एसियाली पारा खुला तेक्वान्दो र २०१९ मै टोकियो पारालिम्पिक गेम्सको टेस्ट इभेन्टमा पाँचौं स्थान हासिल गरेकी थिइन् । यसैगरी सन् २०१९ मा टर्कीमा भएको आठौं विश्व पारा तेक्वान्दोमा नवौं स्थान हासिल गरेकी पलेशाले साउदी अरेबियामा भएको विश्व पारा तेक्वान्दो ग्रान्ड प्रिक्समा पनि सहभागिता जनाएकी थिइन् । सन् २०१६ मा सीता भण्डारीले पोल्यान्डमा भएको ओपन पारा तेक्वान्दो च्याम्पियनसिपमा कास्य पदक जितेकी थिइन् । सीता अहिले पारा तेक्वान्दोबाट टाढा छिन् । सीतापछि रञ्जना धामीले देशलाई केही सफलता दिलाएकी थिइन् ।

नेपाली तेक्वान्दो अहिले विग्रहको अवस्थामा छ । विगतमा योगदान दिने र उपलब्धि पाउनेहरूका पनि थुप्रै गुनासो सुनिएको छ । परन्तु अहिलेको पलेशाको सफलताको कथा १२ वर्षअघि कुँवर दाजुभाइको सोचको उपज भएको भने नकार्न सकिँदैन । अहिले यी दाजुभाइ विदेशमै छन् ।

यसैबीच, पेरिसमा पारालिम्पिक्समा नेपाललाई ऐतिहासिक कास्य पदक जिताएकी पलेशा गोवर्द्धनले ६५ लाख रुपैयाँ पुरस्कार पाउने भएकी छिन् । राष्ट्रिय खेलकुद विकास नियमावली २०७९ ले व्यवस्था गरेअनुसार पलेशाले सो रकम पुरस्कारस्वरूप पाउने भएकी हुन् ।

नियमावलीमा व्यक्तिगत प्रतिस्पर्धामा ओलम्पिक खेल/गृष्मकालीन/ शीतकालीन/पारा/विशेष तथा र विश्वकप फुटबलमा कास्य पदक जित्ने खेलाडीलाई ६५ लाख रुपैयाँ पुरस्कार दिइने उल्लेख छ । पलेशाका प्रशिक्षक कविराज नेगी लामाले ५ लाख ८५ हजार र नेपाल तेक्वान्दो संघले ११ लाख ७० हजार पुरस्कार पाउनेछन् । नियमावलीले ओलम्पिकमा व्यक्तिगततर्फ स्वर्ण विजेता खेलाडीलाई १ करोड ३० लाख र रजत पदक जित्ने खेलाडीलाई ९७ लाख नगद पुरस्कार दिने व्यवस्था गरेको छ ।

पेरिस पारालिम्पिक २०२४ अन्तर्गतको के-४४ वर्गअन्तर्गत महिला ५७ केजीमुनिको स्पर्धामा पलेशाले कास्य पदक जितेसँगै उच्च पदस्थदेखि खेल क्षेत्रका विभिन्न व्यक्तिहरूले बधाई दिएका छन् । राष्ट्रपति रामचन्द्र पौडेलले सामाजिक सञ्जालमार्फत् ऐतिहासिक कास्य पदक विजेता गोवर्द्धनलाई बधाई दिएका छन् । 'फरक क्षमता भएर नेपाली खेलकुदमा आफूलाई अब्बल दर्शाएकी पलेशाले जितेको कास्य पदक नेपाल र नेपालीका लागि गर्वको विषय हो,' उनले भनेका छन् । यस्तै, प्रधानमन्त्री केपी शर्मा ओलीले पनि पारालिम्पिकमा नेपाललाई ऐतिहासिक कास्यपदक दिलाउने पलेशालाई बधाई दिएका छन् । यस्तै, प्रमुख प्रतिपक्षी दल नेकपा (माओवादी केन्द्र) का अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले पनि पलेशाले पारालिम्पिकमा ऐतिहासिक कास्य पदक हात पारेकामा बधाई दिएका छन् । सामाजिक सञ्जालमार्फत् नै उनले पारालिम्पिकमा नेपाली खेलाडीले जितेको यो पहिलो आधिकारिक पदकका लागि बधाई भनेका छन् ।

'नेपालकी पलेशा गोवर्द्धन श्रेष्ठले पारालिम्पिक खेलकुदमा पदक जित्ने हिमाली एसियाली राष्ट्रबाट पहिलो खेलाडी बनेर इतिहास रचेकी छिन्,' उनले भनेका छन्, 'पलेशालाई यस उल्लेखनीय उपलब्धिका लागि बधाई छ, जसले सम्पूर्ण नेपालीहरूलाई गौरवान्वित बनाएको छ ।'

## दुई......

नेता प्रचण्डले केही विषयवस्तु उठाएपछि धारणा राख्न आवश्यक भएको भन्दै नेपालको ऊर्जा उत्पादन र वितरणको विषयमा आक्रामक अभिव्यक्ति दिए ।

'अध्ययनले भन्छ, यदि यो देशमा १० वर्षसम्म माओवादी हिंसा नभएको भए विद्युतमा योभन्दा ठूलो क्रान्ति हुन्थ्यो । माओवादीले कतिवटा ट्रान्समिसन लाइन पड्कायो, कतिवटा सबस्टेसन पड्कायो,' योगेशले भनेका थिए, 'विद्युत् उत्पादन गर्न खोलामा गएका कति व्यवसायीसँग चन्दा उठायो । भगायो । असुरक्षाका कारण भागे । माओवादीको १० वर्षे हिंसा नभएको भए ७५ सालमा होइन, ६५ सालमा नै यो देश लोडशेडिङ मुक्त हुनेथियो ।'

आफूहरूले आदर्श मानेको जनयुद्धलाई एमाले नेताले हिंसा भनेपछि बैठकमा माओवादीले आपत्ति जनायो। माओवादी सांसद माधव सापकोटाले नियमापत्ति गर्दै गैरसंसदीय र अमर्यादित शब्द बोलेको भनेर आपत्ति जनाए । योगेशले हिंसा भन्ने शब्द प्रयोग गरेको भन्दै फिर्ता लिन सापकोटाले आग्रह गरिरहे । माओवादीका अरू सांसद पनि उठेर विरोध जनाउन थाले । तर, अर्कातिरबाट योगेशले पटक-पटक माओवादी हिंसा भनिरहे ।

'हिंसाबाहेक केही होइन, यो हाम्रो परिभाषा हो,' भन्दै योगेशले अडान लिइरहे । विरोध भएपछि अर्कालाई बोल्न नदिनु पनि हिंसा नै भएको जिकिर योगेशले गरे । माओवादीका सांसद र योगेशबीच संसदमा निरन्तर चर्काचर्की पर्‍यो । सभामुखको प्रयत्नमा पनि स्थिति साम्य भएन । सभामुखले सिनियर माओवादी सांसद देवेन्द्र पौडेललाई एक मिनेटमा कुरा राख्न समय दिए । 'कानून र संविधान बनाएका छौं । विभिन्न आन्दोलनको समीक्षा गरेका हुन्छौं । हिंसात्मक द्वन्द्व भनिएको छैन । यसैले म खबरदारी गर्छु,' पौडेलले भने ।

'यस्ता प्रकारका शब्द प्रयोग गरेर नेपालको शान्ति प्रक्रियालाई तलमाथि गर्ने नैतिक धरातल र अधिकार अहिलेको संविधानले दिँदैन,' पौडेलले भने, 'यसरकारण योगेश भट्टराईले प्रयोग गरेको शब्द रेकर्डबाट हटाउनका निम्ति सभामुखलाई आग्रह गर्छु । हामी शान्ति प्रक्रियालाई अगाडि बढाउन चाहन्छौं । यस्ता संविधानविपरीतका कुरा प्रयोग नहुन् भन्ने चाहन्छौं ।'

हिंसा शब्द कसरी प्रयोग भएको छ भन्ने विषय सामान्य छलफलबाट नटुंगिने भन्दै पक्ष र विपक्षमा नजान सभामुखले आग्रह गरेपछि स्थिति सामान्य बन्न पुग्यो । पहिलो दिनको आरोप साम्य भए पनि अर्को दिन फेरि संसदमा पदम गिरी, गोकुल बास्कोटासहितका सांसद झन् आक्रामक हुन पुगे । गिरीले सुन तस्करीको प्रभावकारी छानबिन भए माओवादीको सिंगो हेडक्वार्टर नै खाली हुने र जेलको छिँडीमा पुग्ने भन्दै अर्को सनसनीपूर्ण अभिव्यक्ति दिए ।

संसद्मा मात्रै होइन, योगेश फेरि माओवादीविरुद्ध सामाजिक सञ्जालमा पनि उत्रिए ।

'निर्दोष मानिसको हत्या गर्ने, अपहरण गर्ने, सुतिरहेका पुलिस र सेनामाथि बम हान्ने, जनताको सम्पत्ति लुट्ने, बैंक लुटेर पैसा र सुन माटोमुनि लुकाउने, रक्त चन्दन र गिटीबालुवाको तस्करी गर्ने तिमीहरूको एक ठाउँमा मात्रै छैन, जवाफ देऊ' भनेर लेखे ।

बिहीबार नै माओवादी सांसद छिरिङ डम्डुल लामाले योगेशले जनयुद्धको बेला हतियार तस्करी गरेको आरोप लगाए । 'जनयुद्धको नाममा आफैं चन्दा असुलेर हतियार तस्करी गर्ने अनि आफैं हिंसा गर्ने नाइकेले जनयुद्धलाई हिंसा भन्नु गैरजिम्मेवारीपन हो,' उनले भने ।

तर, पनि बाहिर अरू पार्टी मञ्च, सार्वजनिक फोरम र सामाजिक सञ्जालबाट दुई दलका नेताहरूबीच आपसी द्वन्द्व चलिरहेको छ । सुदूरपश्चिम प्रदेशको परामर्श समिति बैठकमा पुगेका प्रचण्डले फेरि बिहीबार अर्को चेतावनी दिए ।

'सरकारको शुरूआत र संकेत राम्रो नदेखेपछि मैले संसद्बाट बंगलादेश र श्रीलंकालाई सम्झाएको हुँ,' प्रचण्डले कैलालीको धनगढी पुगेर भने, 'यस्तै भइरह्यो र अलि बढी गर्नुभयो भने सडकमा आउँछौं ।'

माओवादी निरन्तर सरकार र पार्टीमाथि खनिएपछि एमालेले बिहीबार सचिवालय बैठक राखेरै माओवादीले भन्ने गरेको जनयुद्धलाई स्वतन्त्र रूपले कसैले पनि नचिन्ने बतायो ।

'अरूले होइन, प्रचण्ड आफैंले विवाद निम्त्याउनुभएको हो । उहाँले संयम गुमाएर दलप्रति आक्षेप लगाउनुभयो । संविधानले सशस्त्र द्वन्द्व चिन्ने हो । संविधानले जनयुद्ध चिन्दैन । माओवादीले ग्लोरिफाइ गर्ने उसको कुरा हो । तर, अरू कसैले जनयुद्ध भनेको छैन । नेकपाकालमा पनि जहाँ शब्द प्रयोग गरिएको छ, माओवादी जनयुद्ध भनिएको छ,' ज्ञवालीले बैठकपछि भने, 'स्वतन्त्ररूपले जनयुद्ध भनेर कहीँ प्रयोग भएको छैन । डेढमहिना अगाडिसम्म हामीसँगै सहकार्यमा हुनुहुन्थ्यो । हामी सरकारमा थियौं । आफ्नो अयोग्यतालाई विषयान्तर गर्नका लागि अनेकौं खालका झूटा आरोप लगाउनुभएको छ । त्यसको प्रतिक्रियाको कुरा आएका हुन् ।'

यतिमात्रै होइन, आफ्नो राजनीतिक भविष्यमा तुवाँलो लागेपछि प्रचण्डले समाज भड्काउने अभिव्यक्ति दिएको भन्दै एमालेले सचेत हुन आग्रह गरेको छ ।

'प्रचण्डले आफ्नो अयोग्यतालाई विषयान्तर गर्न आरोप लगाइरहनुभएको छ । प्रचण्डले अस्थिरताको शृंखला शुरू गरेपछि ठूला दलले नयाँ शुरूआत गरेका हुन्,' एमालेले भनेको छ, 'आफ्नो राजनीतिक भविष्यमा अनिश्चयको तुवाँलो मडारिएर हो कि पार्टीभित्र नेतृत्वको बारेमा च्यालेन्ज उत्पन्न भएपछि हो, प्रचण्डले समाजलाई भड्काउने कुरा गर्नुभएको छ ।'

जिम्मेवार नेताले श्रीलंका र बंगलादेशजस्तो बनाउँछु भनेर धम्की दिएकोप्रति एमालेले आक्रामक अभिव्यक्ति दिएको छ । 'च्यालेन्जको भाषा बोलेर प्रचण्डजी यो देशलाई श्रीलंका र बंगलादेशजस्तो बनाउन खोज्नुभएको हो ? जिम्मेवार मान्छेले यसरी बोल्न मिल्छ ?' एमाले उपमहासचिव ज्ञवालीले भने, 'यस्तो संयम नगुमाउन हामी आग्रह गर्छौं ।'

यही आरोपप्रत्यारोपबीच माओवादी सांसद लेखनाथ दाहालले सामाजिक सञ्जालमार्फत एमाले सांसद योगेशलाई बैगुनी केटो र नम्बरी ठगको संज्ञा दिए । 'महान् जनयुद्धको बलमा प्राप्त उपलब्धिहरू उपभोग गर्ने अनि महान् जनयुद्धलाई हिंसा भन्ने बैगुनी केटो, नम्बरी ठग,' दाहालले सामाजिक सञ्जालमा लेखेका छन् ।

उनको लेखाइमा राजनीतिक संयमता देखिँदैन । तर, माओवादी उप-महासचिव जनार्दन शर्माले पनि उनको स्टाटस आफ्नो सामाजिक सञ्जालमा शेयर गरेका छन् । राजनीतिक विश्लेषक मुमाराम खनाल बढी बोल्नु र एकअर्कालाई गाली गर्नु कम्युनिस्टहरूको विशेषताजस्तै रहेको बताउँछन् ।

'कम्युनिस्ट वा वामपन्थीमा असाध्यै बढी बोल्ने, प्रतिक्रियात्मक हुने संस्कृति छ,' खनालले भने, 'आपसमा मिले जीवनभर नै एकता भयो जस्तो गरेर असाध्यै फुर्किने र छुटेपछि गालीगलौज र प्रतिक्रिया जनाइहाल्ने यिनीहरूको स्वभाव नै हो ।'

'कम्युनिस्ट वा वामपन्थीमा असाध्यै बढी बोल्ने, प्रतिक्रियात्मक हुने संस्कृति छ,' खनालले भने, 'आपसमा मिले जीवनभर नै एकता भयो जस्तो गरेर असाध्यै फुर्किने र छुटेपछि गालीगलौज र प्रतिक्रिया जनाइहाल्ने यिनीहरूको स्वभाव नै हो ।' 'चौथो महाधिवेशन धाराका प्रचण्डको स्कूलिङ अर्कालाई आरोप लगाउने, प्रतिक्रियवादी, संशोधवादी र दक्षिणपन्थी भनिहाल्ने खालको छ,' खनाल भन्छन्, 'आफैंबाट फुटेर गएकालाई समेत आरोप लगाउने प्रचण्डको विशेषता हो ।'

पछिल्लो समय माओवादी आक्रामक हुनुमा सत्ताबाट विमुख हुनुको पीडा पनि कारण रहेको उनी बताउँछन् । 'माओवादी लामो समय सरकारमा बसेर एक्कासि एमालेका कारण बाहिरियो । यसैले हठात् सरकारबाट बाहिरिनुपर्दा तिक्तता र आक्रोश संसद्, सडक र सामाजिक सञ्जालसम्मै देखिएको छ,' उनी भन्छन्, 'सरकारमा जाने राज्यदोहनका लागि हो । साधन र स्रोतमाथि शक्ति र पहुँच नभएपछि नेताहरू यसैगरी आक्रोश व्यक्त गर्छन् ।'

एमालेसँग सत्तामा रहेको कांग्रेसले भने सकेसम्म संयमता देखाउने कोशिश गरेको छ । एमाले र माओवादीबीच आक्रामक दोहोरी चलिरहँदा कांग्रेस सांसद गगन थापाले 'आफैंले लगाएको आगोले जलाउन सक्छ, ख्याल गर्नुस्,' भन्दै राजनीतिक भाषा बोले । तर, आक्रामकता देखाएनन् । विश्लेषक खनाल कांग्रेसमा सरकार फेरबदलको विषयलाई स्वाभाविक मान्ने लोकतान्त्रिक परिपाटी भएको बताउँछन् । 'एमाले र माओवादीबीच एक अर्काविरुद्ध चर्को द्वन्द्व छ, तर कांग्रेस अर्को कुनामा शान्तजस्तो देखिन्छ । कांग्रेसको विशेषता नै कम्युनिस्टको जस्तो प्रतिक्रियातर्फ लागिहाल्नेतिर हुँदैन । लोकतन्त्रमा यस्तो कुरालाई प्राथमिकतामा राख्दैनन्,' उनी भन्छन्, 'विरोध गर्न र आलोचना गर्न पाइन्छ भन्ने कुरालाई संस्कृतिको रूपमा स्वीकार गरेका छन् । सरकार फेरबदल हुन्छ भन्ने कुरालाई उनीहरू स्वाभाविक मान्छन्, तर कम्युनिस्टहरूजस्तो खुला रूपले गालीमा उत्रिँदैनन् ।'

## प्रेमशान्ति...

महत्वपूर्ण योगदान दिनुहुने प्रेमशान्ति तुलाधरलाई बैकुण्ठ लाकौल पुरस्कार प्रदान गरिएको थियो ।

यसैगरी नेपालभाषा केन्द्रीय विभागमा अध्ययन गर्ने महिला विद्यार्थीहरुको प्रोत्साहनको निम्ति स्थापना गरिएको चैन लाकौल पुरस्कार तीनजनालाई प्रदान गरिएको छ । नेपालभाषा स्नातकोत्तर तहमा सबैभन्दा बढी अंक प्राप्त गर्ने महिला विद्यार्थीलाई प्रदान गरिने पुरस्कार प्राप्त गर्नुहुनेहरुमा कृष्णप्यारी श्रेष्ठ, पद्मा खयरगोली र रजनी श्रेष्ठ रहेको छ ।

नेपालभाषा केन्द्रीय विभागका प्रमुख सह प्रा. राजनलाल जोशीको सभापतित्वमा सम्पन्न भएको उक्त कार्यक्रममा स्वागत मन्तव्य राख्दै जोशीले नेपालभाषा केन्द्रीय विभागमा विभिन्न विषयमा अनुसन्धान भइराखेकोले बागमती प्रदेशले नेपालभाषा र तामाङ भाषालाई सरकारी कामकाजी भाषाको मान्यता दिइसकेको अवस्थामा भाषा जानेको जनशक्ति आवश्यक परेमा आफूले सहयोग गर्ने बताए ।

मन्तव्यकै क्रममा उनले दिवंगत नेपालभाषा शिरोमणी बैकुण्ठप्रसाद लाकौलको तर्फबाट उनको परिवारमार्फत निरन्तर प्राप्त भइरहेको सहयोगको प्रशंसा गर्दै नेपालभाषा अध्ययन गर्ने महिला विद्यार्थीलाई प्रोत्साहनस्वरुप चैन लाकौल पुरस्कारको स्थापना भएकोमा आभार प्रकट गर । कार्यक्रममा पुरस्कारका दाता बैकुण्ठप्रसाद लाकौलाका सुपुत्र श्रीकण्ठ लाकौलले बैकुण्ठ लाकौल र चैन लाकौल पुरस्कारको लागि अक्षय कोषको व्यवस्था गरिएको जानकारी दिए ।

कार्यक्रममा नेपालभाषा केन्द्रीय विभागका प्रमुख संस्थापक प्रा.डा. सुन्दरकृष्ण जोशी, पाटन क्याम्पसका प्रमुख लक्ष्मणसिंह कुँवर र पुरस्कार प्राप्त गर्नुहुने प्रेमशान्ति तुलाधरले पनि आफ्नो मन्तव्य राखेका थिए, भने उप प्रा. जीवनकुमार महर्जनले तुलाधरको विषयमा प्रकाश पारेको थियो ।

## नेपाल भाषा......

समयको माग र प्रविधिको विकाससँगै २०६३ सालदेखि एक-एक घण्टाका दरले दिनमा १७ पटक समाचार प्रदान गर्दथ्यो । राससले पछिल्लो समय अनलाइनमार्फत निरन्तर रूपमा आफ्नो सेवा सम्प्रेषण गर्दै आएको थियो भने अब राससले आफ्ना सेवाग्राहीलाई २४सै घण्टा समाचार सेवा प्रदान गर्ने भएको छ ।

यसै सन्दर्भमा राससको जिज्ञासामा सरकारका प्रवक्तासमेत रहेका सञ्चार तथा सूचना प्रविधिमन्त्री पृथ्वीसुब्बा गुरुङले राससको २४सै घण्टा सेवालाई व्यवस्थित र प्रभावकारी बनाउन सरकारको सहयोग हुने बताएको छ । उनले भने, "अहिले विश्वका सबैजसो सञ्चारमाध्यम दिनरात नभनी २४सै घण्टा नै सञ्चालित छन् । निरन्तर समाचार सेवा प्रवाहमा लागेका छन् । नेपालमा पनि जनतालाई सूचना प्रदान गर्ने दायित्व बोकेको सरकारको महत्वपूर्ण सञ्चार अङ्ग राष्ट्रिय समाचार समिति पनि यसमा अझै बढी जिम्मेवार हुनुपर्छ । रासस समाचारको मुहान हो । कुनै पनि समय घटेका महत्वपूर्ण घटना प्रवाह गर्न रासस चुक्नु हुँदैन । रातिको समय घटेका घटनाका समाचार झनै जनचासोको विषय हुनसक्छ । राससको रात्रिकालीन समाचार सेवाले राससको महत्व बढ्छ भन्नेमा विश्वस्त छु । यसलाई सरकारले आफ्नो उपलब्धिका रुपमा लिएको छ ।"

त्यसैगरी राससका कार्यकारी अध्यक्ष धर्मेन्द्र झाले राससको २४ घण्टे सेवाले आमसेवाग्राही सञ्चारमाध्यम त लाभान्वित हुनेछन् नै, सँगै आमनागरिकको सूचना र समाचारको दायरा पनि झन् फराकिलो हुने विश्वास व्यक्त गरेको छ । "सामाजिक सञ्जालको तीव्र प्रयोगका कारण सेकेण्ड-सेकेण्डमा प्रवाह भएका सूचनाले आमनागरिकलाई दिग्भ्रमित बनाउन सक्ने सम्भावनालाई राससको यस विस्तारित सेवाबाट न्यूनीकरण गर्न मद्दत पुग्ने विश्वास छ", उनले भने ।

यसैगरी, राससका महाप्रबन्धक सिद्धराज राईले २४सै घण्टा सेवालाई व्यवस्थित र प्रभावकारी बनाउन सञ्चारमाध्यम र आमपाठकबाट सल्लाह, सुझाव र सहयोगको अपेक्षा गरेको बताए । उनले भावी दिनमा हाम्रा सेवाग्राहीबाट प्राप्त सुझावका आधारमा सेवालाई थप परिष्कृत गर्दै अझ चुस्त र प्रभावकारी बनाउन प्रतिबद्धता व्यक्त गरे । सुरुआतमा नेपाली भाषामा समाचार सेवा सञ्चालन गरिएको राससले समयसापेक्ष रुपमा सेवाग्राही र आमजनताको मागबमोजिम २०२० फागुनदेखि अङ्ग्रेजी र अन्तर्राष्ट्रिय समाचार, २०५५ वैशाखदेखि आलेख समाचार, २०६४ सालदेखि राष्ट्रिय तथा अन्तर्राष्ट्रिय फोटो, २०६६ फागुन ७ देखि अडियो (श्रव्य), २०७९ साउनदेखि आलेख/विचार र अन्तर्वार्ता हुँदै हाल श्रव्यदृश्य समाचार सेवा प्रवाह गर्दै आएको छ ।

राससले विभिन्न मातृ भाषामा समाचार बुलेटिन प्रकाशन गरी मिडिया बहुलवादको नीति कार्यान्वयन गर्ने जमर्को गरेको छ । सोही नीतिअनुसार राससले गत वर्षदेखि अवधि भाषाको माध्यमबाट मातृभाषामा पनि समाचार सेवा उपलब्ध गराउँदै आएको छ । निकट भविष्यमा नै नेपाल भाषा तथा मैथिली भाषामा समाचार सेवा उपलब्ध गराउने तयारीमा जुटेको छ ।

## मधेशको.....

उनले सबै दल र सरोकारवालाहरुलाई यस विषयमा गम्भीरतापूर्वक ध्यान दिन र जनताका पक्षमा रहेको सम्झौताका बुँदाहरुलाई तत्काल कार्यान्वयनमा ल्याउन आह्वान गरेका छन् । उनले मधेशीहरु मुद्दाबाट विचलित भई ठूला दलहरुको पुच्छर भएको आरोप लगाए । 'मधेशी दलहरु ठूलाका पुच्छर भए, सीके राउतले स्वतन्त्र मधेशको कुरा गरेका थिए, कहाँ गए स्वतन्त्र मधेश ?' उनले आक्रोश पोख्दै भने, 'जसपा माओवादीको पुच्छर, लोसपा कांग्रेसको पुच्छर र जनमत पार्टी एमालेको पुच्छर भएका छन् ।'

मधेशी दलले मधेशी जनताका लागि नभई आफ्नो परिवार र विदेशीका लागि काम गर्दै आएको आरोप लगाए । उनले मधेशी दलहरुले २२ जिल्लाको मधेशलाई आठ जिल्लामा सीमित गरेको आरोप लगाउँदै भने, 'मधेशी दलहरुले मधेशी जनतासँग माफी माग्नुस्, तफाइँहरु आफ्नो व्यवहारमा सुधार ल्याउनुस्, नभए यसको परिणाम भयावह हुनेछ ।' केही दलाल मधेशी नेताहरुका कारण मधेशको स्वाभिमान खसेको भन्दै अब मधेशी दलहरुकै विरुद्ध आन्दोलन गर्नुपर्ने अवस्था आउन लागेको उनले जिकिर गरे ।

संयोजक झाले मधेशी दलका नेताहरुलाई नै मधेशवाद के हो भन्ने कुरा थाहा नभएको बताए । उनले मधेशी दलहरुका लागि मधेशवाद भनेको कांग्रेस, एमाले र माओवादी चाप्लुसी गर्ने मात्र रहेको आरोप लगाए । 'मधेशी दलका नेताहरुलाई मधेशवादको पाठ पढाउन हामी तयार छौं । उहाँहरु सुध्रिनुहुन्छ भने सुध्रिनुस्, होइन भने आगामी परिणामका लागि तयार हुनुस्,' उनले भने ।

यसैगरी, पत्रकार सम्मेलनमा अभियानका नेता डा.आदर्श नागवंशीले मधेशी जनता मधेशी दलबाट पनि पीडित रहेको बताएका छन् । उनले भने, 'हामी गैरमधेशी दलहरुबाट त पीडित छँदैथियौं, मधेशी दलहरुबाट पनि पीडित हुँदै आएका छौं । हामीले मधेश जनजागरण अभियान (त्रिनेत्र)मार्फत सचेत गराउन चाहन्छौं ।'

कार्यक्रममा अभियानका नेताहरु प्रकाश कट्टारी, पंकज देव, भरत सहनी लगायतका वक्ताहरुले मधेशी दलहरुलाई सुध्रिन आग्रह गरेका छन् । ती वक्ताहरुले आगामी दिनमा मधेशी दलहरु सुध्रिएन भने ती दलहरुकै विरुद्ध मधेशमा भण्डाफोर गर्ने र आन्दोलनसमेत गर्ने चेतावनी दिएका छन् । मधेश जनजागरण अभियानले विगतमा मधेशी दलहरुले सरकारसँग गरेका सम्झौताहरुबारे स्मरणपत्र बुझाएका थिए । त्यसबारे मधेशी दलहरु कुनै किसिमको गम्भीरता नदेखाएको भन्दै पत्रकार सम्मेलन गर्न बाध्य भएको बताएका थिए ।

## देशभक्तहरुको.....

गराउन पाएकोमा खुसी व्यक्त गर्दै समन्वय गर्ने सबैलाई धन्यवाद समेत दिनुभयो ।

टोखाको मूध्वाखास्थित वडा कार्यालयको हलमा सम्पन्न भएको कार्यक्रममा उद्घोषण, औपचारिक कार्यक्रममा सिलसिला मिलाएर बोल्ने शैली, प्रचलित नेपाल लिपि प्रशिक्षण लिएका प्रशिक्षार्थीहरुलाई प्रमाणपत्र वितरण गरिएको थियो । ग्वहालि पुचःले यसअघि कीर्तिपुर, तारकेश्वर नगरपालिकाको मनमैजु, फुटुङ, धर्मस्थली, भक्तपुरको थिमि, काठमाडौंका विभिन्न टोलमा प्रशिक्षण कार्यक्रम सम्पन्न गरेको छ । कार्यक्रममा टोखा नगरपालिकाका विभिन्न वडाका जनप्रतिनिधि, समाजसेवी, शिक्षासेवी, गृहिणी लगायत सहभागी थिए ।

## उपत्यकामा.....

गर्नुको साथै 'लामखुट्टे खोज र नष्ट गर' अभियान सञ्चालन गर्न आग्रह गरेको छ । सरकारी अस्पतालमा डेंगु रोगका बिरामीका उपचार खर्च सरकारले व्यहोर्ने निर्णय गरेको छ ।

यस्तै महाशाखाका अनुसार हैजाका बिरामी ७५ जना पुगेका छन् । महाशाखाका कीटजन्य रोग शाखाका प्रमुख डा.दाहालका अनुसार ललितपुरमा ५० काठमाडौंमा १० जना, कैलालीमा आठ जना, प्यूठान दुई, मकवानपुर एक र रोल्पामा चार जनामा हैजा पुष्टि भएको जनाएको छ ।

हैजा अति सङ्क्रामक र शीघ्र फैलिने झाडापखाला भएकाले हैजाको मुख्य लक्षण चौलानी पानी जस्तो दिशा आउने वाकवाकी लाग्ने र वान्ता हुने, कडा जलवियोजन हुने गर्दछ ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# मलयालम फिल्म उद्योगमा यौन उत्पीडनको मुद्दाले हंगामा

एजेन्सीं । भारतको दक्षिण भारतीय मलायमल फिल्म उद्योगमा यौन काण्डका कारण हलचल मच्चिएको छ । महिला अभिनेत्री तथा चलचित्रकर्मीहरुले कार्यक्षेत्रमा यौनहिंसाको शिकार भएको भन्दै खुल्न थालेपछि ठूला स्टार पनि विवादमा तानिएका छन् । चर्चित अभिनेता तथा कलाकार संघ एमएमएका अध्यक्ष मोहनलालले आफ्नो पदबाट राजीनामा दिएका छन् । अभिनेता र उनको कार्यकारिणी सदस्यले पदबाट राजीनामा दिएको स्थानीय टिभी च्यानलले जनाएको छ ।

मोहनलालले केरलाका मुख्यमन्त्रीलाई आफ्नो निर्णयबारे जानकारी गराएका छन् । संघमा कलाकारमाथि यौन दुर्व्यवहारको गम्भीर आरोप लागेपछि उनको राजीनामा आएको हो । मोहनलाल नेतृत्वको मलयालम चलचित्र कलाकार संघका १७ कार्यकारिणी सदस्यले सामूहिक रुपमा राजीनामा दिएका छन् ।

सन् २०१७ मा अभिनेत्री उत्पीडन प्रकरणपछि केरला सरकारले गठन गरेको न्यायाधीश हेमा समितिको प्रतिवेदन सार्वजनिक भएपछि हंगामा मच्चिएको हो । प्रतिवेदनले मलयालम फिल्म उद्योगमा महिला उत्पीडन र शोषणका घटनाको खुलासा गरेको छ । यसपछि आइतबार फिल्म उद्योगबाट दुई जनाले राजीनामा दिएका थिए ।

निर्देशक रञ्जित केरला फिल्म एकेडेमीको अध्यक्ष र अभिनेता सिद्दिकी एएमएएमएको अध्यक्ष थिए । गत शनिबार श्रीलेखा मित्राले रन्जीतले वर्षौंअघिको स्क्रिप्टमा छलफल गर्दा आफूमाथि दुर्व्यवहार गरेको आरोप लगाएकी थिइन् । एफआईआर दर्ता गरेपछि प्रहरीले यस विषयमा अनुसन्धान सुरु गरेको छ । ठोस प्रमाण फेला परे रञ्जित पक्राउ पर्न सक्छन् ।

श्रीलेखाले भनिन्, 'रञ्जित मलयालम फिल्म उद्योगका ठूलो नाम र राष्ट्रिय पुरस्कार विजेता निर्देशक हुन् । म आगामी फिल्म प्रोजेक्टको बारेमा छलफल गर्न उनको घर गको थिएँ । तर मलाई उनको व्यवहार मन परेन । स्क्रिप्टको बारेमा छलफल गर्दा मलाई असहज महसुस भयो ।' दुर्व्यवहारपछि आफू फिल्मको हिस्सा बन्न अस्वीकार गर्दै कोलकाता फर्किएको अभिनेत्री श्रीलेखाले बताएकी छन् ।

वरिष्ठ फिल्म निर्माता तुलसीदासमाथि अभिनेत्री श्रीदेविकाले आरोप लगाएकी छन् । उनले तुलसीदासले आफ्नो फिल्म 'आवान चण्डियुदे माकन' (२००७) मा काम गर्दा दुर्व्यवहार गरेको दाबी गरेकी छन् । यस फिल्ममा उनीसँगै पृथ्वीराज सुकुमारन थिए । यो घटना सन् २००६ मा फिल्मको सुटिङ चलिरहेको बेला भएको अभिनेत्रीको दाबी छ ।

श्रीदेविकाले भनिन्, 'अवान चण्डियुडे माकनको सुटिङका क्रममा तुलसीदासले मेरो होटलको कोठाको ढोका ढकढकाउने गर्थे धेरै दिनसम्म । मैले होटलको रिसेप्सनिस्टलाई पनि सोधें, जसले तुलसीदास हो भनेर पुष्टि गऱ्यो ।' अभिनेत्री गीता विजयनले पनि तुलसीदाससँगको आफ्नो पीडादायी अनुभव सुनाएकी छिन् । आफूले पनि यस्तै उत्पीडनको सामना गर्नुपरेको र यसविरुद्ध आवाज उठाउँदा धेरै फिल्मबाट निकालिएको उनले बताइन् ।

गीताले सन् १९९१ मा आएको फिल्म 'छनछट्टम'को सुटिङका क्रममा तुलसीदासले लगातार दुर्व्यवहार गरेको आरोप लगाएकी छन् । तर तुलसीदासले यी आरोप अस्वीकार गरेका छन् । 'छनछट्टम' को सुटिङका क्रममा आफू कहिल्यै गीताको ढोकामा नगएको उनको दाबी छ ।

# अग्रिम बुकिङमा GOAT, रिलिजअघि नै बढी कमाई

एजेन्सी । साउथ सुपरस्टार थालापथी विजयको 'द ग्रेटेस्ट अफ अल टाइम' जीओएटी सन् २०२४ को बहुप्रतिक्षित चलचित्रहरू मध्ये एक हो । यो चलचित्रलाई लिएर निकै चर्चा चलेको छ । यो चलचित्र छिट्टै हलमा रिलिज हुँदैछ । यसैबीच 'द ग्रेटेस्ट अफ अल टाइम' को लागि अग्रिम बुकिङ सुरु भएको छ । रिलिज हुनुअघि नै फिल्मले देशभर बम्पर कमाई गरेको छ । फिल्म हेर्नको लागि पहिलो दिन नै दर्शकले टिकट बुकिङ गरिरहेका छन् ।

थालापथी विजयको 'द ग्रेटेस्ट अफ अल टाइम'को बज रिलिज हुनुअघि नै सुरु भएको छ । चलचित्रले अग्रिम बुकिङमा ठूलो कलेक्सन गरेको छ । अहिलेसम्म 'द ग्रेटेस्ट अफ अल टाइम' को ३.५ लाखभन्दा बढी टिकट अग्रिम बुकिङमा बिक्री भइसकेको छ । एक रिपोर्ट अनुसार 'द ग्रेटेस्ट अफ अल टाइम' को ३,६८,८३७ टिकट अग्रिम बुकिङमा बिक्री भइसकेको छ ।

यसरी फिल्मले रिलिज अघि नै ७.९४ करोड कमाइसकेको छ । तमिल टुडि संस्करणको अधिकतम ३६?४०८७ टिकटहरू बिक्री भइसकेका छन् । यसपछि, तेलुगु २ डि को ३,११३ टिकटहरू र त्यसपछि तमिल आइम्याक्स २ डि संस्करणको १६३७ टिकटहरू बिक्री भएका छन् । ब्लक सिट सहित फिल्मले अहिलेसम्म १०.५२ करोड कमाइसकेको छ ।

थालपति विजय फिल्म 'द ग्रेटेस्ट अफ अल टाइम' गोट मा दोहोरो भूमिकामा देखिनेछन् । फिल्ममा उनले र एजेन्ट गान्धीको भूमिका निभाएका छन् । यसबाहेक उनी छोराको भूमिकामा पनि देखिनेछन्, जसको नाम जीवन हो । 'द ग्रेटेस्ट अफ अल टाइम' को कथा गान्धीको चरित्रको वरिपरि घुम्छ, जसले विशेष आतंकवाद विरोधी टोलीमा काम गर्छ । फिल्मलाई वेंकट प्रभुले निर्देशन गरेका हुन् । 'द ग्रेटेस्ट अफ अल टाइम' फिल्म सेप्टेम्बर ५, २०२४ शुक्रवार हलमा रिलिज हुँदैछ ।

# "थाई फिल्म फेस्टिभल नेपाल २०२४" शुक्रबारबाट

काठमाडौंस्थित रोयल थाई दूतावासले घोषणा गरेको 'थाई फिल्म फेस्टिभल नेपाल २०२४' आयोजना गर्ने शुक्रबार देखि शुरु हुने भएको छ। सो महोत्सव बारे जानकारी दिन दूतावास परिसरमा आयोजित पत्रकार सम्मेलनमा नेपालका लागि थाई राजदूत सुपापोङ सिरिसोर्नले नेपाल र थाइल्याण्डबिचको कूटनीतिक सम्बन्धको ६५ वर्ष पूरा भएको अवसरमा दशकअघिदेखि रोकिएको फेस्टिभल पुनः सुरु गर्न लागेको जानकारी दिएका छन् ।

फेस्टिभल यही भदौ १४ गते शुक्रबारदेखि ठमेलस्थित छाया सेन्टरको क्यूएफएक्स सिनेमा हलमा सुरु भई भदौ १६ गते आइतबार समापन हुनेछ। यो नेपालमा आयोजना हुन लागेको चौथो थाई फिल्म फेस्टिभल हो, जसको अघिल्लो संस्करण सन् २०१३ मा भएको थियो।

राजदूत सिरिसोर्नले नेपाल र थाइल्याण्डबीचको लामो सम्बन्धलाई सम्मान गर्न र चलचित्रको विश्वव्यापी भाषामार्फत थाई र नेपाली जनतालाई नजिक ल्याउन फेस्टिभलको आयोजना गरिएको बताए। साथै, उनले भविष्यमा पनि यो फेस्टिभल निरन्तर आयोजना गरिने जनाए।

यस फेस्टिभलमा थाई चलचित्र बजारमा प्रशंसित र पुरस्कार विजेता ६ वटा चलचित्रहरू प्रदर्शन गरिनेछन्। दर्शकहरूले कमेडी, रोमान्स, र हरर श्रेणीका चलचित्रहरूको आनन्द लिनुका साथै निःशुल्क थाई खानाको स्वाद समेत चाख्न पाउनेछन्।

फेस्टिभलको उद्घाटन भदौ १४ गते साँझ ५:३० बजे 'हाउ टु मेक मिलियन्स बिफोर ग्रान्डमा डाइज' चलचित्रको प्रदर्शनसँगै हुनेछ। त्यसपछि सोही साँझ 'प्याड थाई द मुभी' देखाइनेछ। भदौ १५ गते मध्यान्ह १२:१५ बजे 'टुगेदर द मुभी' र दिउँसो ३ बजे 'अन्डरटेकर' प्रदर्शन हुनेछ। अन्तिम दिन भदौ १६ गते साँझ ५:३० बजे 'ड्रिम अ लिटिल ड्रिम' र त्यसपछि साँझ ७ बजे 'ब्रोकन सोर्ड हिरो' चलचित्र प्रदर्शन हुनेछ। फेस्टिभलमा निःशुल्क प्रवेशको व्यवस्था गरिएको छ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ | अङ्क ०९ | ने.सं. ११४४ | भाद्र २६ गते बुधबार, २०८१ | 11 Sept. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## दुईतिहाई सरकारको कमजोर स्थिति !



काठमाडौं । देशका दुई ठूला दल नेपाली कांग्रेस र नेकपा एमाले मिलेर एमादे अध्यक्ष केपी शर्मा ओलीको नेतृत्वमा अन्तिम विकल्पको रुपमा बनाइएको सरकार बाटो पहिल्याउन नसकेको र गतिहीनजस्तो देखिन थालेको छ । संसद्को पहिलो र दोस्रो दल मिलेर सरकार बनाउने दुर्लभ अभ्यासलाई स्वयं कांग्रेस-एमालेका नेताले अन्तिम विकल्प भनेका थिए ।

नयाँ सरकार गठन भएको दुई महिनामा जनतालाई उत्साह दिने गरी सरकारले कुनै काम गर्न सकेको छैन । सरकारले साझा न्यूनतम् कार्यक्रमसमेत बनाउन सकेको छैन । सरकारको गन्तव्य के हो, के गर्न खोजेको हो भन्ने अन्योल कायमै छ । तर नेपालको संविधान २०७२ को संशोधन गर्ने विषय भने दुवै दलले जोडतोडका साथ उठाएको छ । तर दुवै दलले संविधानको कुन विषयमा संशोधन खोजेको हो सो विषयमा भने कुनै स्पष्ट धारणा सार्वजनिक गरेको छैन ।

पुष्पकमल दाहाल 'प्रचण्ड'को सरकारलाई हटाएर बनेको सरकारले देखिने गरी गरेको एउटै काम हो- पुल्चोकस्थित पुराना घरबाट मन्त्रीहरू भैंसेपाटीका सुविधासम्पन्न भवनमा पुगेका छन् ।

कर्मचारीसरह सरकारका मन्त्रीले सिंहदरबार ओहोरदोहोर गरेर दैनिक प्रशासनिक काम गरिरहेका छन् । सामान्य संसदीय लोकतन्त्रमा सरकारको १०० दिनको कामलाई प्रतिपक्षी दलले आलोचना नगर्ने परम्परा थियो । तर, प्रतिपक्षी दलका नेता प्रचण्डले डेढ महिना नबित्दै सरकारविरुद्ध धुँवाधार विरोध गरे, संसद्को रोस्ट्रमबाट । पहिलो र दोस्रो दल मिलेर सरकार बनाउँदा भत्किएको संसदीय मूल्य मान्यतामाथि प्रचण्डले चर्को रुपमा धावा बोले ।

ओली सरकारको आलोचना गर्न प्रचण्डले देखाएको हतारोलाई कतिपयले सहज मानेका छैनन् । 'पुराना' राजनीतिक दलका नेताप्रति जनआक्रोश बढिरहेको समयमा प्रचण्डले त्यसमा इन्धन खन्याउने कोशिश गरेका थिए ।

वर्तमान सरकारलाई प्रतिनिधि सभामा दुईतिहाइ (२७५ मध्ये १८८) सांसदको समर्थन प्राप्त छ । संसद्बाट संविधान नै संशोधन गर्न सक्ने अंकगणित ओलीसँग छ । कांग्रेसजस्तो भरपर्दो र विश्वासिलो शक्ति सत्तासाझेदार छ । तैपनि सरकारको आत्मबल बलियो देखिँदैन ।

सत्ता गठबन्धनका २ प्रमुख नेता प्रधानमन्त्री ओली र कांग्रेस सभापति शेरबहादुर देउवा सहभागी गौरा पर्वको कार्यक्रममा भएको नाराबाजीको भोलिपल्ट प्रचण्डले त्यही आक्रोशका साथ संसद्बाट धावा बोले । संसदीय सीमारेखा ३ दलले भत्काइसकेपछि सरकारको काम कारबाहीप्रति टीकाटिप्पणी गर्नका लागि सय दिन कुर्नुपरेन ।

प्रचण्ड-रविले भन्ने गरेका सबै फाइल खोलिएको भएपनि जनताको जीवनमा कुनै तात्विक असर पर्ने थिएन ।

बाँकी पेज ७ मा

## नेवाः सांस्कृतिक ज्ञानकोष प्रकाशन




काठमाडौं । काठमाडौं महानगरपालिकाको सहयोगमा नेपालभाषा एकेडेमीले प्रकाशन गरेको नेवा साँस्कृतिक ज्ञानकोषको विमोचन कार्यक्रम वरिष्ठ साहित्यकार, मूर्तिकार, संगीतकर्मी एवम् संस्कृतिविद्को तर्फबाट संयुक्त रुपमा जमलस्थित राष्ट्रिय नाचघरमा सम्पन्न भएको छ । कार्यक्रममा नेपालभाषा एकेडेमीका चान्सलर मल्ल के सुन्दरले नेवाः सांस्कृतिक ज्ञानकोष नेवाः समुदायको आत्मा भएको बताएको छ । उनले ज्ञानकोष विमोचनको क्रममा उक्त कुरा बताएका हुन ।

जनकवि दुर्गालाल श्रेष्ठ, क्रोधकला शिरोमणी कालु कुम्हाः, संस्कृतिविद् यज्ञमानपति बज्राचार्य, साहित्यकार सुवर्णकेशरी चित्रकार, संगीतकर्मी श्रीगोपाल प्रजापतिबाट संयुक्तरुपमा पुस्तकको विमोचन

बाँकी पेज ७ मा

## मातृभाषाका पत्रिकाहरू सम्मानित




काठमाडौं । नवौं भाषा पारेर भाषा आयोगले एक आयोग दिवसको अवसर

बाँकी पेज ७ मा

## यःसिं गुँबाट ईन्द्रजात्राको लागि यःसिं लगियो

भक्तपुर । ईन्द्रजात्राको अवसरमा काठमाण्डौंको बसन्तपुरमा ठड्याउने यःसिं शुक्रवार भक्तपुरबाट लगिएको छ । भक्तपुरको सूर्यविनायक नगरपालिका-१० चित्तपोलस्थित यःसिं गुँबाट उक्त यःसिं भक्तपुरबासीले तानेर काठमाण्डौं पुऱ्याएको हो ।



भाद्र शुक्लपक्ष अर्थात् यँलाथ्व द्वादशीको दिन ईन्द्रध्वजोत्थान अर्थात यःसिं ठड्याएर आठ दिन काठमाण्डौं उपत्यकामा धुमधामका साथ ईन्द्रजात्रा मनाईन्छ । सोही ईन्द्रजात्राको लागि यःसिं लगिएको हो । यःसिं भक्तपुरको सूर्यविनायक नगरपालिका-१० चित्तपोलस्थित यःसिं गुँदेखी ताथली, च्याम्हसिंह, जगाती, सूर्यविनायक, थिमि, कोटेश्वर, बानेश्वर, माइतीघरहुँदैं

बाँकी पेज ७ मा

## नेवार समुदायको चथाः पर्व



काठमाडौं । चथा अर्थात् गणेश चतुर्थीको अवसर पारेर नेवा समुदायले गत शुक्रवार घरघरमा गणेशको पुजा गर्नुको साथै रातमा चथाः देवताको रुपमा चन्द्रमाको पुजा गरेर चथाः पर्व मनाएका छन । यो पर्वलाई नेवार समुदायले दशैं भित्र्याउने पर्वका रुपमा पनि मनाउँछन ।

यस दिन बेलुकी चन्द्रमाको पुजा गर्ने गरिन्छ । विशेष गरि यस दिन चन्द्रमाको पुजा गरे वर्ष भरि अनाहकमा नकारात्मक दोष नलाग्ने जनविश्वास रहेको पाईन्छ ।

यसै दिन भगवान गणेशको जन्म दिनको रुपमासमेत मनाईने यो चथाः पर्वमा एक थरी नेवार समुदाय चन्द्रमालाई हेर्न नहुने मान्यता राख्छन भने अर्को समूह खुल्ला आँगन वा कौशीमा बसेर चन्द्रमा उदाएपछि पुजा गर्छन ।

चथाः पुजामा विशेषगरी विमिरो, भोगटे, भुटेको मकै, भटमास, गहुँ, चना, केराउ, बकुल्ला जस्ता गेडागुडी र काँक्रो र नासपाती चढाईन्छ ।

पुजा सकिएपछि सोही चढाएको गेडागुडी र फलफुल प्रसादको रुपमा बाँढेर खाने प्रचलन रहेको छ । भक्तपुरका अदुवा खेती गर्ने किसानहरुले अदुवा खेतीको पुजा गरी नयाँ

बाँकी पेज ७ मा



## चाडपर्वको मुखमै महँगियो भान्छा, बेखबर छ नियमनकारी निकाय

हरिप्रसाद शर्मा

काठमाडौं- महत्वपूर्ण चाडपर्व नजिकिँदै गर्दा बजारमा खाद्यवस्तु, सागसब्जी र उपभोग्य सामग्रीको मूल्य अचाक्ली बढेको छ । चाडपर्वको मौका छोपी व्यापारीहरूले दैनिक उपभोग्य वस्तुहरूको मूल्य बढाएका हुन् ।

बजारमा चामल, दाल, चिनी, तेल, दलहन, तरकारी, माछा, मासु र अण्डा लगायत दैनिक उपभोग्य वस्तुको मूल्य बढेको हो । खासगरी थोक व्यापारीले नै उपभोग्य वस्तुको मूल्य बढाएर पठाएको खुद्रा व्यापारीहरू बताउँछन् ।

खाद्य वस्तुहरूको थोक मूल्य बढेर आएसँगै खुद्रा व्यापारीहरूले पनि आफूखुसी मूल्य बढाएका हुन् ।




अघिल्लो वर्षको यही समयमा ९० रुपैयाँ प्रतिकिलो पर्ने चिनीको मूल्य यतिखेर १५० रुपैयाँसम्म पुगेको छ । नेपाल खुद्रा व्यापार संघका अनुसार एक वर्षअघि २०८० भदौ २५ गते चिनीको मूल्य प्रतिकिलो ९० देखि

बाँकी पेज २ मा

## चाडपर्वको.......

९५ रुपैयाँसम्म थियो । कतिपय खुद्रा व्यापारीले १३० रुपैयाँ देखि १५० रुपैयाँ प्रतिकिलोका दरले मूल्य असुलिरहेको उपभोक्ताहरूको गुनासो छ । 'अघिल्लो वर्षको यही समयमा चिनीको मूल्य ९० देखि ९५ रुपैयाँ प्रतिकिलो थियो । यसपालि मूल्य बढेर १३० रुपैयाँसम्म पुगेको छ,' संघका अध्यक्ष पवित्र बज्राचार्यले बताए ।

दाल, चामल र तेल लगायत अधिकांश खाद्य वस्तुमा अघिल्लो वर्षको तुलनामा १० देखि १५ प्रतिशतसम्म मूल्यवृद्धि गरिएको बज्राचार्यले बताए । उनका अनुसार प्रतिबोरा चामल (२५ र ३० किलो तौल) कै मूल्य १०० देखि १५० रुपैयाँसम्म बढाइएको छ ।

यसैगरी दाल र तेलजन्य अन्य खाद्य वस्तुको मूल्य पनि केही न केही बढेर आएको उनले बताए । थोक व्यापारीले मूल्यको बिक्रीदर बढाएर पठाएकाले खुद्रा व्यापारमा आइपुग्दा खाद्यवस्तुको मूल्य बढेको बज्राचार्यको भनाइ छ ।

'यो वर्ष अधिकांश खाद्य वस्तुको मूल्य गत वर्षको तुलनामा बढेको देखिन्छ,' उनले भने, 'खुद्रा बजारसम्म पुग्दा चिनी प्रतिकिलो १३० रुपैयाँसम्म पुगेको छ, अन्य खाद्यवस्तुमा १० देखि १५ प्रतिशतसम्म मूल्यवृद्धि भएको छ ।'

पछिल्लो केही दिनयता लगातार परेको वर्षाका कारण मुलुकभर सडकखण्डहरू अवरुद्ध हुँदा खाद्यवस्तुसँगै तरकारी र फलफूलजन्य वस्तुको मूल्य पनि बढेको छ । महत्वपूर्ण राजमार्गहरूमै आवागमन रोकिँदा काठमाडौंसम्म ल्याउन ढुवानी गरिएको तरकारी र फलफूलजन्य वस्तु पनि बीचमा कुहिने तथा सड्ने गरेको किसानहरूको गुनासो छ ।

काठमाडौं उपत्यकाका सबैभन्दा ठूलो तरकारी बजार कालीमाटीमा पनि तरकारी तथा फलफूलजन्य वस्तुको मूल्य बढेर आएको छ । अघिल्ला वर्षको तुलनामा यसपालि पानी बढी परेकाले पनि कतिपय तरकारी तथा फलफूलको मूल्य अचाक्ली बढेको व्यापारीहरूको तर्क छ ।

चाडपर्वमा सबैभन्दा बढी खपत हुने प्याज र लसुनको मूल्य समेत बढेको छ । अघिल्लो वर्षको तुलनामा अहिले प्याजको मूल्य दोब्बरले बढेको हो । कालीमाटी तरकारी बजार विकास समितिका अनुसार अघिल्लो वर्ष यसै समयमा भारतीय सुकेको प्याजको मूल्य औषत ७० देखि ८० रुपैयाँसम्म थियो । तर, अहिले प्याजको थोक मूल्य प्रतिकिलो १२५ रुपैयाँ र खुद्रा मूल्य पनि बढेर १५० देखि १६० रुपैयाँसम्म पुगेको छ । अघिल्लो वर्षको तुलनामा यसपालि भारतीय सुकेको प्याजको मूल्य ७३ प्रतिशत बढेको देखिन्छ ।

भारतीय रातो आलुको मूल्य पनि अघिल्लो वर्षको तुलनामा बढेको छ । २०८० भदौ २४ मा प्रतिकिलो औषत ३५ रुपैयाँ थोक मूल्यमा पाइने रातो आलुको मूल्य अहिले ५७ रुपैयाँ पुगेको छ । त्यस्तै, अघिल्लो वर्ष ४५ रुपैयाँ प्रतिकिलोमा पाइने घिरौंलाको मूल्य बढेर ६५ देखि ७० रुपैयाँ पुगेको कालीमाटी तरकारी तथा फलफूल विकास समितिले जनाएको छ ।

त्यस्तै, भारतीय गोलभेँडा ठूलोको मूल्य गत वर्षभन्दा यसपालि झनै बढेको छ । अघिल्लो वर्ष यसै समयमा ४५ रुपैयाँ प्रतिकिलो औषत रहेको गोलभेँडाको मूल्य अहिले ६५ रुपैयाँ पुगेको छ । अदुवा, तने बोडी, स्थानीय काउली, लौका, रायो साग, च्याउ, सेलरी, पार्सले, कागती, अनार, खुर्सानी र हरियो धनियाँ लगायतको मूल्य पनि केही बढेको छ ।

ब्रोइलर कुखुराको मासु सस्तिँदा खसीबोका झनै महँगो

अण्डा र ब्रोइलर कुखुराको मासुको मूल्य भने त्यत्ति बढेको देखिँदैन । केही हप्ताअघि अण्डा ठूलो साइजको मूल्य प्रतिक्रेट ५३० रुपैयाँसम्म पुगेको थियो । अहिले अण्डाको थोक मूल्य ४३० रुपैयाँमा झरिसकेको छ ।

अण्डा र कुखुराको मासुको मूल्य यथावत नै रहेको नेपाल कुखुरा बजार व्यवस्थापक संघका अध्यक्ष हरिकृष्ण लोहनीले खबरहबलाई जानकारी दिए । उनका अनुसार खसी तथा बोकाको मासु प्रतिकिलो १३०० देखि १३५० रुपैयाँसम्म पुगेको छ ।

त्यस्तै, एक महिनाअघि प्रतिकिलो १६०० रुपैयाँमा बिक्री भएको काजुको मूल्य अहिले बढेर २१०० रुपैयाँ पुगेको व्यापारीहरूले बताएका छन् ।

बेखबरजस्तै छ नियमनकारी निकाय

चाडपर्व नजिँकिँदै जाँदा बजारमा उपभोग्य वस्तुको मूल्य बढे पनि सरकारी नियमनकारी निकाय भने बेखबर जस्तै छ । बजारमा खाद्य वस्तुको गुणस्तर र मूल्यवृद्धि भइरहँदा त्यसको प्रभावकारी अनुगमन भने हुन नसकेको हो ।

नियमनकारी निकायको प्रभावकारी अनुगमन नहुँदा बिचौलिया व्यापारीले चाडपर्वका मौका छोपी उपभोक्तामाथि ढाड सेक्ने गरी मूल्यवृद्धि गर्ने गरेको उपभोक्ता हित संरक्षण मञ्चका महासचिव विष्णुप्रसाद तिमल्सिना बताउँछन् ।

'चाडपर्वको मौका छोपी व्यापारीले मूल्य बढाउने परम्परा यसपालि पनि देखिएको छ,' उनले भने, 'खाद्यवस्तुदेखि सबै वस्तुको मूल्य बढेको छ । उपभोक्ताहरू मर्कामा परेका छन् ।' चाडपर्वका बेला विगतमा मौज्दात गरेका, म्याद गुज्रेका र कम गुणस्तकार खाद्य वस्तु समेत बजारमा भेटिने गरेको तिमल्सिनाले बताए ।

दसैं र तिहारलगायत ठूला चाडबाडका बेला पुराना र स्टक सामानहरू पनि व्यापारीहरूले बाहिर निकाल्ने गर्दा गुणस्तर र मूल्यमा समेत प्रश्न उठ्ने गरेको छ । कर्मकाण्डी अनुगमनले बजार नसुध्रिने तिमल्सिना बताउँछन् ।

उनी भन्छन्, 'चाडपर्वमा झारा टार्ने किसिमको अनुमगले बजारको मूल्य र गुणस्तर नियमन हुन सक्दैन् । दैनिक रूपमा गरिने अनुगमन एकीकृत र व्यवस्थित हुनुपर्छ ।'विभागको दाबी - 'अनुगमन भइरहेको छ'

चाडपर्व नजिकिँदै जाँदा खाद्यवस्तुको मूल्य र गुणस्तरलाई विशेष प्राथमिकतामा राख्दै दैनिक बजार अनुगमन गरिरहेको वाणिज्य, आपूर्ति तथा उपभोक्ता हित संरक्षण विभागले जनाएको छ ।

'चाडपर्वको मौका छोपी व्यापारीले मूल्य बढाउन सक्ने र वस्तुको गुणस्तरमा समेत प्रश्न उठ्ने गर्छ,' विभागका महानिर्देशक राजन पौडेलले भने, 'त्यसका लागि विभागले अन्य निकायसँग मिलेर संयुक्त अनुगमन गरिरहेको छ ।'

चाडपर्वका बेला मूल्य र गुणस्तरका सम्बन्धमा स्वयम् उपभोक्ता पनि सचेत हुन जरुरी रहेको उनको भनाइ छ । उनले कुनै गुणस्तरहीन र मूल्यवृद्धि गरेको थाहा पाए विभागमा जानकारी गराएर सहयोग गर्न समेत उपभोक्तालाई आग्रह गरेका छन् । खबरहबबाट

## हिमालय क्षेत्रमा वातावरण परिवर्तन सम्वन्धी ३ दिने अन्तराष्ट्रिय सेमिनार हुने

काठमाडौं । जलवायु परिवर्तनले हिमालय क्षेत्रमा पार्ने प्रभावहरूका सम्वन्धमा ३ दिने अन्तराष्ट्रिय सेमिनार हुने भएको छ । भदौ २८, २९ र ३० गते काठमाडौंमा हुने सेमिनारका बारेमा नीति अनुसन्धान प्रतिष्ठान नेपालले आज काठमाडौंमा पत्रकार सम्मेलन गरि जानकारी दिएको छ ।

तीन दिन हुने सेमिनारमा नेपाल सहित भारत, बंगलादेश, म्यानमार र भुटानका प्राध्यापक, वैज्ञानिक र जलवायु तथा वातावरणको क्षेत्रमा कार्यरत विज्ञहरू सहभागि हुने सेमिनार आयोजक समितिका संयोजक निकेश कुमार लम्सालले जानकारी दिनु भयो । कार्यक्रममा म्यानमारलगायत दक्षिण एसियाली राष्ट्रका प्रतिनिधिहरूले जलवायु परिवर्तन, वातावरणीय प्रभाव र यसको असर सम्बन्धी विभिन्न प्रस्तुति दिने छन् ।

विभिन्न देशका विज्ञहरूको सहभागिता रहने कार्यक्रममा पच्चिस भन्दा बढी कार्यपत्रहरू प्रस्तुत हुनेछन् । कार्यक्रममा केही देशका विज्ञहरू पनि अनलाइनमार्फत् जोडिने छन् भने सेमिनारको अन्त्यमा काठमाडौं घोषणापत्र जारि हुनेछ ।

स्थानीय तथा परम्परागत ज्ञान, वैज्ञानिक अध्ययन अनुसन्धान र प्रभावकारी नीति तर्जुमा गर्दै राष्ट्रहरू बीचको नियमित संवाद र सहकार्यमार्फत् साझा प्राकृतिक स्रोत साधनहरूको समन्वयात्मक एवं समुन्नत सदुपयोग गरी यस क्षेत्रका सम्पूर्ण मानिसहरूको साझा हित रक्षार्थ तीन दिने कार्यक्रम कोषेढुङ्गा हुने अपेक्षा गरिएको संयोजक लम्सालले बताउनु भयो । कार्यक्रमको उद्घाटन सत्र प्रकृति संरक्षण कोषको सभागृह, खुमलटार, ललितपुरमा भाद्र २८ गते हुनेछ भने भाद्र २९ र ३० गते प्राविधिक सत्रहरू सञ्चालन गरिने प्रतिष्ठानका उपाध्यक्ष डा. प्रेमराज न्यौपानेले जानकारी दिनु भयो ।

सेमिनार नीति अनुसन्धान प्रतिष्ठान, नेपाल (नेनाप), राष्ट्रिय प्रकृति संरक्षण कोष, एशियाली अनुसन्धान केन्द्र- त्रिभुवन विश्वविद्यालय, भारतीय सामाजिक विज्ञान अनुसंधान परिषद, भारतीय प्रबन्ध संस्थान शिलोंग, अन्तर्राष्ट्रिय प्रकृति संरक्षण संघ (आईयूसीएन) र क्लाइमेट एलायन्स अफ हिमालयन कम्युनिटिजको संयुक्त आयोजनामा हुनेछ ।



## "सुन्दर" मायाजालबाट सावधान रहन चीनको आह्वान

एजेन्सी । चीनको राज्य सुरक्षा एजेन्सीले गत बुधबार संवेदनशील जानकारीमा पहुँच भएका विद्यार्थीहरूलाई 'सुन्दर पुरुष' वा 'सुन्दर महिला' को मायाजालमा नपर्न चेतावनी दिएको छ । एजेन्सीका अनुसार तिनीहरूले विद्यार्थीहरूलाई विदेशी शक्तिका लागि जासुसी गर्न लोभ्याउन सक्छन् । गत वर्ष विच्याट खाता खोल्दा विदेशी जासुसहरूले आफ्नो मुलुकसँग विश्वासघात गर्नका लागि प्राय कठोर र असामान्य तरिकाले वफादार चिनियाँहरूलाई प्रलोभनमा पार्न काम गरिरहेको भन्ने बेइजिङको राज्य सुरक्षा मन्त्रालय (एमएसएस) को दाबीलाई बढावा दिएको छ । विदेशी जासुसहरूको 'अनगिन्ती रूप छन् र तिनीहरूले आफ्नो लिङ्ग पनि परिवर्तन गर्न सक्छन' भन्ने चेतावनी दिँदै मन्त्रालयले नागरिकहरूलाई मुलुकको खतराविरुद्ध 'एक अर्ब ४० करोड जनताको रक्षा' गर्न आह्वान गरेको छ । साथै मन्त्रालयले विदेशी गुप्तचर एजेन्सीहरूमाथि चिनियाँ विद्यार्थीलाई लोभ्याउन 'रोमान्स जाल' तैनाथ गरेको आरोप लगाएको छ । विदेशी जासुसहरूले गोपनीय जानकारी हस्तान्तरण गर्नका लागि विद्यार्थीहरूलाई विशेषगरी 'संवेदनशील वैज्ञानिक अनुसन्धान डाटा' सम्म पहुँच भएकाहरूलाई 'प्रलोभनमा पार्न र बाध्य बनाउन' नोकरीको विज्ञापन र अनलाइन डेटिङको पनि प्रयोग गरिरहेको एमएसएसले बताएको छ । एमएसएसले चेतावनी दिँदै भनेको छ, "उनीहरूले आफूलाई 'सुन्दर पुरुष' वा 'सुन्दर महिला' का रूपमा पनि युवा विद्यार्थीहरूलाई 'रोमान्सको जाल' मा तान्न सक्छन् ।" एमएसएसले कथित योजनापछाडि कुन मुलुक थियो भन्नेबारे बताएको छैन । तर एजेन्सीले जासुसहरूले आफूलाई विश्वविद्यालयको विद्वान, वैज्ञानिक शोधकर्ता वा सल्लाहकारका रूपमा विद्यार्थीहरूलाई पैसाको अभावमा प्रलोभनमा पार्न सक्ने चेतावनी दिएको छ । यसलाई 'लक्षित घुसपैठ' भनिन्छ । यसै महिना एमएसएसले 'राम्रो सामरी (परोपकारी वा सहयोगी व्यक्ति)' भएको देखावटी गर्ने 'भेडाको लुगामा ब्वाँसाहरू' विदेशी एजेन्टहरूबाट सावधान रहन जनतालाई चेतावनी दिएको थियो । एजेन्सीले जुनमा बेलायतको एमआई-६ गुप्तचर एजेन्सीमाथि बेलायतका लागि जासुसी गर्न केन्द्रीय सरकारका लागि काम गर्ने एक जोडीलाई भर्ती गरेको आरोप लगाएको थियो । दशकौंमा चीनका सबैभन्दा शक्तिशाली राष्ट्रपति सी जिनपिङको नेतृत्वमा बेइजिङले मुलुकको उत्थानलाई रोक्न विदेशी शक्तिहरूले प्रयास गरिरहेको चेतावनी दिएको छ । चीन र पश्चिमा शक्तिहरूले लामो समयदेखि एकअर्कामाथि जासुसी गरेको आरोप लगाउँदै आएका छन् र उनीहरूले हालै मात्र कथित व्यक्तिगत मामिलाको विवरण सार्वजनिक गर्न थालेका छन् । मे महिनामा अनुसन्धानकर्ताहरूले चीनका लागि जासुसी गरेको आशङ्कामा जर्मन एमईपीको ब्रसेल्स कार्यालयमा खानतलाशी गरेको थियो । मङ्गलबार न्युयोर्क राज्यका गभर्नरको सहयोगीका रूपमा काम गर्ने एक पूर्वअधिकारीलाई लाखौं डलरको बदलामा चीनको एजेन्टका रूपमा काम गरेको आरोपमा पक्राउ गरिएको थियो ।

## इजरायली हमलामा ४० को मृत्यु

एजेन्सी । प्यालेस्टिनी क्षेत्रको दक्षिणमा रहेको मानवीय क्षेत्रमा मंगलबार भएको इजरायली हमलामा ४० जनाको मृत्यु हुनुका साथै ६० जना घाइते भएको गाजाको नागरिक सुरक्षा विभागले जनाएको छ । इजरायली सेनाले उक्त क्षेत्रको हमास कमाण्ड सेन्टरलाई लक्षित गरी आक्रमण गरेको जनाएको छ ।

गाजाको दक्षिणी सहर खान युनिसको अल-मवासीमा आक्रमण पछि दशौं हजार विस्थापित प्यालेस्टिनीले त्यहाँ शरण लिएका थिए ।

यद्यपि, इजरायली सेनाले यस क्षेत्र वरपर अपरेसन जारी गरेको छ । जुलाईमा हमासका सैन्य प्रमुख मोहम्मद देइफसहित ९० जनाभन्दा बढी मानिस मारिएको गाजाका स्वास्थ्य अधिकारीहरूले बताएका छन् ।

गाजाका नागरिक सुरक्षा अधिकारी मोहम्मद अल-मुघाइरले आक्रमणमा मृत्यु भएका तथा घाइते भएकालाई नजिकैको अस्पतालमा लगिएको बताएका छन् ।

खान युनूसमा विस्थापितको शिविरलाई लक्षित गरी आक्रमण गर्दा बेपत्ता भएका १५ व्यक्तिहरूको उद्धारका लागि विभागका कर्मचारीहरू निरन्तर खटिरहेको मुगैरले उल्लेख गरे ।

नागरिक रक्षाका प्रवक्ता महमुद बासलले शिविरमा शरण लिइरहेका मानिसलाई आक्रमणको चेतावनी नदिएको उल्लेख गर्दै आवश्यक सामग्रीको अभावले उद्धार कार्यमा बाधा पुगेको बताए ।

उनका अनुसार आक्रमणका कारण २०-४० भन्दा बढी शिविरहरु पूर्ण रूपमा क्षतिग्रस्त भएका छन । इजरायली सेनाले विज्ञप्ति मार्फत खान युनिसको मानवीय क्षेत्रबाट सैन्य कारवाही गरिरहेका हमासलाई प्रहार गरेको जनाएको हो ।

गाजामा लडाकु समूहले तोकिएको मानवतावादी क्षेत्रसहित नागरिक र मानवीय पूर्वाधारको व्यापक दुरुपयोग गरेको जनाइएको छ ।

हमासले विज्ञप्ति मार्फत आफ्ना लडाकुहरू आक्रमण स्थलमा उपस्थित नभएको दाबी गरेको छ । युद्धको क्रममा, इजरायलले हमासलाई बारम्बार सर्वसाधारणको नरसंहार गरेको आरोप लगाएको छ भने हमासले आरोपको अस्वीकार गरेको छ ।

गाजा आक्रमणमा हालसम्म कम्तिमा ४० हजार ९८८ जनाको ज्यान गएको हमासद्वारा सञ्चालित स्वास्थ्य मन्त्रालयले जनाएको छ । संयुक्त राष्ट्रसङ्घको मानव अधिकार कार्यालयले मृतक मध्ये अधिकांश महिला तथा बालबालिका रहेको र अधिकाशं जनसङ्ख्या विस्थापित भएको जनाएको छ । अमेरिका, कतार र इजिप्टले इजरायल र हमासबीच युद्धविराम र बन्धक-कैदी आदानप्रदान सम्झौता गर्ने प्रयासमा मध्यस्थता गरिरहेका छन् यद्दपी हाल वार्ता रोकिएको छ ।

# जापानी शाही परिवारमा महिलालाई किन उत्तराधिकारी बनाईदैनन् ?



एजेन्सी । पछिल्लो चार दशकमा पहिलो पटक जापानको शाही परिवारमा केटा वयस्क भएको छ । राजकुमार हिसाहितो ६ सेप्टेम्बरमा १८ वर्षका भए । उनी जापानका राजा नारुहितोका भतिजा हुन् । उनका बुबा, क्राउन प्रिन्स अकिशिनो, १९८५ मा १८ वर्षको उमेर पार गर्ने अन्तिम पुरुष हुन् । राजकुमार हिसाहितो शाही परिवारका १७ सदस्यमध्ये कान्छो र परिवारका चार पुरुष सदस्यमध्ये एक हुन् । उनी शाही परिवारको अन्तिम उत्तराधिकारी पनि देखिन्छन् । राजपरिवारका महिलालाई किन सिंहासनमा बस्ने अधिकार छैन ?

किन महिलालाई सिंहासनमा अधिकार छैन ?

जापानको शाही परिवार संसारको सबैभन्दा पुरानो राजतन्त्र मध्ये एक हो । यस वंशमा सुरुदेखि नै राजपरिवारका पुरुष सदस्यले मात्र राजा बन्ने र राजगद्दी सम्हाल्ने चलन रहेको छ । यस परम्पराको जरा पनि जापानी समाजमा छ, जुन सामान्यतया पुरुषमुखी छ । सन् १९४७ मा सिंहासनमा पुरुषको एकमात्र सर्वोच्चताका लागि कानुन पनि ल्याइयो । जसको नाम इम्पेरियल हाउस ल हो ।

यस कानून अनुसार, राजकुमार हिसाहितो अब राजा बन्ने लाइनमा छन्, चाहे उनी वर्तमान राजाको प्रत्यक्ष उत्तराधिकारी नभए पनि । राजा नारुहितोको आफ्नै छोरी पनि छिन्, तर शाही कानून अनुसार उनले सिंहासन पाउने छैनन् ।

हरेक पटक प्रस्ताव अस्वीकृत

यसअघि पनि धेरै पटक राजपरिवारका महिलालाई पनि राजगद्दीमा बस्ने अधिकार दिनुपर्छ भन्ने प्रस्ताव आएको थियो तर त्यसले कुनै प्रगति गर्न सकेन । पछिल्लो पटक राजकुमार आइकोको जन्मपछि यस्तै प्रस्ताव ल्याइएको थियो तर सन् २००६ मा उनका छोरा हिसाहितोको जन्म भएपछि यो प्रस्ताव खारेज भएको थियो ।

इम्पेरियल कानूनले के भन्छ ?

सन् १९४७ मा बनेको इम्पेरियल कानूनमा शाही परिवारसँग सम्बन्धित नियमहरू छन् । जसमा पुरुष सदस्य मात्रै राजा बन्न सक्छ भन्ने स्पष्ट उल्लेख छ । इम्पेरियल कानून अनुसार, शाही परिवारकी राजकुमारीले सामान्य व्यक्तिसँग विवाह गरेमा उनको शाही उपाधि खोसिन्छ । उसलाई एक निश्चित रकम दिइन्छ तर कुनै पनि पारिवारिक सम्पत्तिमा उत्तराधिकारीको अधिकार छैन । जबकि राजकुमारको लागि नियम फरक छ । उसले सामान्य महिलासँग विवाह गर्न सक्छ । त्यो विवाहबाट जन्मने सन्तानले पनि उत्तराधिकार पाउनेछन् ।

यो कानुनको किन विरोध भइरहेको छ ?

जापानमा हालैका वर्षहरूमा जनसंख्या द्रुत रूपमा घटेको छ । जापानमा वृद्धहरूको संख्यामा बृद्धि भैरहेको छ । जनसंख्याको ६५% भन्दा बढी ८० वर्ष भन्दा माथिका छन् । मानिसको उमेर बढ्दै गएको अनुपातमा बालबालिकाको जन्मदरमा बुद्धि हुन सकेको छैन । विशेष गरी, पुरुष जन्मदर धेरै कम छ । प्रत्येक १०० महिलामा ९५ जना पुरुष छन् । जापानको राजपरिवार पनि यो संकटको सामना गरिरहेको छ । त्यही भएर राजपरिवारका महिलालाई राजगद्दीमा राख्ने माग र इम्पेरियल ऐन परिवर्तनको माग पनि बेलाबेलामा उठ्ने गरेको छ । विशेष गरी २०१७ देखि, यो परम्पराको बारेमा बहस शुरु भएको छ ।

के राजकुमार हिसाहितो अन्तिम उत्तराधिकारी हुन् ?

सन् १९६५ देखि २००६ सम्म जापानको इम्पेरियल परिवारमा कुनै पनि पुरुष सन्तानको जन्म भएको छैन । सन् २००६ मा, राजकुमार हिसाहितोको रूपमा अन्तिम पुरुषको जन्म भएको थियो । त्यसयता १८ वर्ष भइसक्यो र अहिलेसम्म कुनै पुरुष जन्मिएको छैन । यस्तो अवस्थामा राजकुमार हिसाहितोपछि राजगद्दीको उत्तराधिकारी को हुने भन्ने प्रश्न उठेको छ । कानुन परिमार्जन नगरे राजपरिवारको अवस्था के होला ?




# तेज दिमाग र तीक्ष्ण बुद्धिका लागि राती सुत्नुअघि गर्नुहोस् यी ७ काम !

एजेन्सी । तपाईंले राती सुत्नु अघि गर्ने गतिविधिहरूले तपाईंको शरीर र दिमागमा ठूलो प्रभाव पार्छ । यदि मैले यसलाई यसरी राखें भने, भोलि तपाईको लागि कस्तो हुनेछ आज राती सुत्नु अघि तपाईले के गर्नुभयो त्यसमा निर्भर गर्दछ । मस्तिष्कलाई बुझ्नु वैज्ञानिकहरूको पहुँचमा पनि छैन । मनका पजलहरू आफैमा जटिल हुन्छन् । आजको आधुनिक समयमा हाम्रो गलत दिनचर्याको कारणले हाम्रो दिमाग झनै कमजोर बनिरहेको छ । धेरैजसोले आफ्नो मोबाइलबाट साना साना कुराहरू पनि हटाउनु पर्छ । यस्तो हुनबाट बच्न चाहनुहुन्छ भने राति सुत्नुअघि केही काम गर्नुहोस् । यी कार्यहरूले मस्तिष्कलाई अति तेज बनाउन मद्दत गर्न सक्छ ।

दिमागलाई तेजिलो बनाउन अपनाउनुहोस् यी ७ काम

१. गहिरो सास फेर्न- टिओआई समाचारका अनुसार, तपाईको दिमाग सधैं तनाव र हवाई उडान मोडमा हुन्छ । दिनभरको तनावपछि दिमागलाई आराम चाहिन्छ । यस्तो अवस्थामा मस्तिष्कको स्नायुसम्म अक्सिजन पुग्न आवश्यक हुन्छ । जब तपाइँ गहिरो सास फेर्न अभ्यास गर्नुहुन्छ, अर्थात्, गहिरो, लामो सास लिनुहोस्, यसले तपाइँको मस्तिष्कलाई थप अक्सिजन प्रदान गर्दछ र यसले मस्तिष्कको प्यारासिम्प्याथेटिक स्नायु प्रणालीलाई सक्रिय बनाउँछ । यसले मस्तिष्कलाई सुरक्षित महसुस गराउनेछ र यो आराम र रिफ्रेस मोडमा आउनेछ ।

२. किताब पढ्नुहोस् - आजकल मानिसलाई आफ्नो मोबाइल नहेरी निद्रा लाग्दैन तर यो एकदमै गलत बानी हो । जसका कारण धेरै रोग लाग्ने खतरा हुन्छ । दिमाग दिनभर हाइपरएक्टिभ रहने भएकाले राति सुत्नुअघि किताबको केही पाना पढ्दा मस्तिष्क आरामको दिशामा जान्छ । यसले स्मरण शक्ति बढाउँछ ।

३. स्क्रिन समय घटाउनुहोस् - यदि तपाइँ रातमा स्क्रिन बिना समय बिताउनुहुन्न वा यो बिना सुत्नुहुन्न भने, तुरुन्तै सतर्क हुनुहोस् । राति सुत्नुअघि सकेसम्म चाँडो आफ्नो स्क्रिन हेर्ने बानीमा सुधार गर्नुहोस् । यदि तपाईंले यसो गरिरहनुभयो भने मस्तिष्कको कोर्टेक्स भाग पातलो हुनेछ । यस पछि चीजहरू सम्झन गाह्रो हुन्छ ।

४. सुत्दा योग - राती सुत्नुअघि ओछ्यानमा केही समय योग वा ध्यान गर्नुहोस्, यसले दिमागलाई शान्त अवस्थामा ल्याउनेछ । सुत्ने समय योगले तनाव हटाउन मद्दत गर्नेछ र मस्तिष्कमा रक्तसञ्चारलाई गति दिनेछ, जसले मस्तिष्कलाई थप अक्सिजन प्रदान गर्नेछ ।

५. पजलहरू समाधान गर्नुहोस् - यदि तपाइँ आफ्नो दिमाग वा बुद्धिलाई तिखार्न चाहनुहुन्छ भने, यसलाई हरेक दिन बानी बनाउनुहोस् । राति, यदि तपाईले केहि पजलहरू जस्तै खाली बक्सहरू नम्बरहरू भर्ने, क्रसवर्डहरू हल गर्ने आदि जस्ता कार्यहरू समाधान गर्नुभयो भने काम गरिरहनुहोस् । यसले मस्तिष्क कोशिकाहरूलाई स्वस्थ बनाउँछ ।

६. साथीहरूसँग डिनर - यदि तपाइँ तपाइँको दिमाग स्वस्थ, तपाइँको स्मरणशक्ति तेज र तपाइँको बुद्धि तेज राख्न चाहनुहुन्छ भने, कहिलेकाहीँ साथीहरू र परिवारसँग डिनर गर्नुहोस् । यसले तपाईलाई खुशी दिनेछ । खुशीको अनुभूतिले मस्तिष्कका कोशिकाहरूलाई स्वस्थ बनाउँछ । यसले मस्तिष्कको कार्यमा सुधार गर्नेछ ।

७. बादाम र बीउ - सूजन मस्तिष्क कोशिकाहरूको सबैभन्दा ठूलो शत्रु हो । बदाम र दाना सूजन हटाउनको लागि उत्तम विकल्प हो । बदाम र दानामा ओमेगा ३ फ्याटी एसिड र एन्टिअक्सिडेन्ट प्रशस्त मात्रामा पाइन्छ जसले मस्तिष्कमा सूजन हुनबाट बचाउँछ ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### जनताको सुविधा नै सरकारको कसी हो !

नेपालमा कुन समय कसको सरकार बन्छ, कसको सरकारबाट बहिर्गमन हुन्छ र कुन कुन दल मिलेर सरकार बन्छ ? यस विषयमा सामान्यतया आंकलन गर्न सामान्य जनताको लागि मुीस्कल हुने गरेको छ। सत्तामा रहेको दल हिजोसम्म देशका हरेक क्षेत्र गतिशिल र समृद्धि तर्फ लम्केको देख्ने तर सत्ताबाट बहिर्गकन भएको केही समय पछि नै देशमा बेथितिको अवस्था सिर्जना भएको र आम जनताले सरकारबाट न्याय नपाएको अवस्था देख्ने राग नयाँ होइन।

विगतमा नेकपा एमाले, नेपाली कांग्रेस र नेकपा माओवादीले पालै पालो देशमा गणतन्त्र स्थापना पश्चात दोहो÷ तेह्र्याई सत्ता भोग गरेको इतिहास कायम छ। तर राजनीतिक दलहरुले भने जस्तो सबिधान लागू भएको ९ बर्ष पछि पनि देशको अवस्थामा कुनै सुधार आउन नसकेको देशका प्रमुख राजनीतिक दलहरु र तीनका नेता तथा कार्यकर्ताहरले नै स्विकार गरेको बस्तुस्थिति हो।

यसरी सत्तामा हुनेहरूले शासनको बागडोर थामेर जनतालाई गुन लगाएको ठानीरहेका छन्। जनताले भने सरकारले तिनका सानातिना समस्या कसरी सहज बनाउँछ त्यसैका आधारमा मूल्याङ्कन गर्छन्। पराराष्ट्रमन्त्रीलाई भारतका प्रधानमन्त्रीले महत्व दिए वा नयाँ अर्थमन्त्री नियुक्त भएपछि सेयर बजारमा वृद्धि भएको समाचारले जनतालाई फरक पर्दैन। तर तिनको ध्यान दैनिक जीवनको अवस्थामा निर्भर हुन्छ।

कुनै पनि सरकारले चमत्कार गर्न सक्तैन। नागरिकले पनि सरकारबाट चमत्कार खोजेका हुँदैनन्। सरकारले अलिकति महत्व दिएमा सजिलै हुनसक्ने काम गरिदेओस् भन्ने जनचाहना हुन्छ। अहिले देशमा चाड पर्वको मौसम शुरु हुन लागेको छ। दशैं आउन महिना दिन पनि बाँकी छैन। यसैले दसैंमा आज जनताले सहजता महशुश गर्न सकेमात्र पनि सरकारको उपलब्धि ठान्ने छन्।

तर, नेपालका अधिकांश सडकको अवस्थाले भने यतिबेला सडक यात्रा गर्न 'ज्यानकै बाजी थापे'जस्तै हुनेगर्छ। सहायक कच्ची सडकमा वर्षा यामका कारण केही असुविधा हुनु स्वाभाविक भएपनि राजमार्ग भनिएका मुख्य सडकहरूको अवस्था पनि पटक्कै सुरक्षित र सुविधाजनक छैन। मुख्य राजमार्गहरूसमेत वर्षौंसम्म यात्रा गर्नै नसकिनेगरी अलपत्र पारिएका छन्। यसको मुख्य कारण सरकारी लापरबाही नै हो। यात्रुको सुविधा र सुरक्षालाई सरकारले कहिल्यै प्राथमिकता दिएन।

यसपटकको चाडपर्वको अवसरमा हुने सडक यात्रा सरकार जनताप्रति कति संवेदनशील छ भन्ने थाहा हुनेछ। यात्रुको सुरक्षा र सुविधा नै सरकारको मूल्याङ्कन गर्ने कसी हो।

त्यस्तै अहिले देशमा आम जनताको दैनिकीमा समेत बजेटको की हुने अवस्था देखिएको छ। बजारमा चाडपर्व लक्षित अनुगमनले पनि आज जनताको स्वास्थ्य विपरित व्यापारीहरुको गैर जिम्मेवारपन देखिने गरेको छ। जुन आज मात्र होइन विगतमा पनि देखिने गरेको हो। तर सरकार र सरोकारवाला निकाय भने यस तर्फ चासोका साथ अगाडि आएको देखिदैन, जसको कारण चाडवाडमा आम जनताहरु जेखिममा पर्ने देखिएको छ। यस्तै बजारमा मुल्यबृद्धि, सामानको कृत्रिम अभाव आदिले पार्ने समस्याहरूसँग आम जनता जुभिरहेको छ। तर सरकारमा बस्ने राजनीतिक दल, तिनका कार्यकर्ताहरु र सरोकारवाला निकायसमेत यस विषयमा गम्भीर भएको देखिन्न।

यस्तो अवस्थामा आम जनताको चाहना भनेको नै सुरक्षित सडक तथा हवाई मार्गबाट सहज र सुलभ तरिकाबाट आवागमन र चाडवाडको समयमा बजारमा दैनिक जीवन यापन र पर्व लक्षित उपभोग्य बस्तुको सहजता र मूल्यमा स्थिरताको आवश्यकता परिपूर्ति गर्न सकेमा मात्र पनि यो सरकारको सफलता आज जनताले देख्ने छ। किनकी जनताको सुविधा नै सरकारको कसी हो !

# एमाले कमजोर बन्यो कि बालेन बलियो ?

● डा. अतिन्द्र दाहाल

केही समययता सामाजिक सञ्जालमा काठमाडौँ महानगरका मेयर बालेन्द्र (बालेन) शाह र प्रधानमन्त्री केपी शर्मा ओलीबिचको रस्साकस्सी निकै आक्रामक बनेको छ। काठमाडौँको मेयरमा निर्वाचित भएपछि ओलीलाई भेट्न बालेन स्वयं बालकोट गए। त्यो भेट सम्मानजनक थियो होला। तबला लिँदा र दिँदाको हार्दिकताले फरक सन्देश विचरण गरेको थियो। तर उक्त सामीप्यता अहिले खण्डहर बनेको छ।

बा र बालेन एकअर्काप्रति भ्याएसम्म शब्दका फायरिङ खोलिरहेका छन्। एमाले सांसद रेखा शर्माको प्रसंग, गिरी-बन्धुमा पैसा लिएको भन्ने आशयको स्टाटस, सत्ता समीकरणमा टिप्पणी, सडक विभागको ढोकामा फोहोर फालेको प्रसंगमा कटाक्षेप, सुकुमबासी व्यवस्थापन, धरहराको पार्किङ लगायत अनेकौं विषयमा सार्वजनिक आरोप तथा प्रत्यारोप चलिरहेको छ। केही दिनअघि त सामाजिक सञ्जालमा बालेनका समर्थकले ओलीलाई र ओलीका समर्थकले बालेनलाई अनफलो गर्ने होडबाजी चल्यो। यी परि स्थितिले यो पंक्तिकार लगायत थुप्रै अध्येतालाई अनेकौं प्रश्न निर्माण गरेको छ। विगतमा अन्य केही अवाञ्छित र अनुचित सन्दर्भले पनि कहिलेकाहीँ यो पंक्तिकारलाई दुविधा हुने प्रश्न जन्माएका थिए।

दुविधाजन्य प्रश्न

ठमेल क्षेत्र आसपासमा एकपटक बाटोमा हिँड्दै गरेका यात्रुलाई ट्याक्सीले ठक्कर दियो, उल्टै ठक्कर दिने ट्याक्सी कुच्चिएपछि यात्रुसँग क्षतिपूर्ति मागिएको थियो रे। यो चाहिँ सुनेको मात्र हो। तर प्रश्न उब्जिएको थियो, मान्छे बलियो थियो कि ट्याक्सी कमजोर ?

केही वर्षपहिले दुधकोसी खोलामाथि बनेको एउटा पुल हावाले भत्कायो। योचाहिँ कुनै समाचारमा पढेको पनि हो। प्रश्न उब्जियो, हावा बलियो कि पुल कमजोर ?

अघिल्लो वर्ष एउटा पार्टीमा जाँदा त्यहाँका सहभागीमध्ये एक गिलास कोक लिएको मानिसले तीन प्याक ह्विस्की पिइसकेको र पिइरहेको मानिसलाई मन्त्रमुग्ध हुने गरी गफ चुटिरहेको देखियो। अनि प्रश्न उब्जियो, कोक कडा र ह्विस्की कमजोर ?

भारतमा नरेन्द्र मोदी प्रथमपटक सुविधाजनक बहुमतसाथ प्रधानमन्त्री निर्वाचित भएपछि यो पंक्तिकार स्वयंले एक अन्तर्राष्ट्रिय सम्मेलनमा चर्चा गरेको थियो– मोदीले जितेको कि राहुल गान्धीले हारेको ?

अहिले यस्तै एउटा प्रश्न उब्जिएको छ, बालेन बलियो भएका हुन् कि एमाले कमजोर बन्दै गएको हो ?

एउटा स्वतन्त्र व्यक्ति र महानगरको मेयरसँग एउटा स्थापित पार्टीको अध्यक्ष तथा देशको प्रधानमन्त्रीले किन पौंठेजोरी खेल्नुपर्छ ? किन भयभीत हुनुपर्छ ? किन सवाल-जवाफ गर्नुपर्छ ? सामाजिक सञ्जालमा वाद/प्रतिवादमा उत्रनुभन्दा नागरिक सेवामा तल्लीन रहनुले चाहिँ परिपक्व राजनीतिक अभ्यास देखाउँछ होला ! यद्यपि सामाजिक सञ्जाल अबको राजनीतिमा महत्वपूर्ण हतियारचाहिँ हो।

बाराक ओबामाले प्रथमपटक राष्ट्रपति निर्वाचित भएपछि स्मार्ट फोन निर्माण गर्ने व्यक्तिलाई फोनमार्फत नै धन्यवाद भनेका थिए। किनकि त्यो फोन अथवा त्यसमा चल्ने सामाजिक सञ्जालले उनको विजयी यात्रा सुनिश्चित गर्न ठूलो योगदान गरेको थियो। आजको समयलाई 'गभर्मेन्ट इन् पकेट' भनिन्छ। सबैको खल्तीमा यस्तो उपकरण छ, जसले सरकारका बारेमा थाहा पाउने र सरकार बनाउने वा भत्काउने हैसियत राख्छ। 'लाइक वार : वेपनाइजेसन अफ सोसल मिडिया' नामक पुस्तकले सामाजिक सञ्जाल अबको राजनीतिक हतियार भएको निष्कर्ष निकालेको छ। पछिल्लो राजनीतिक माहोलको नेतृत्व निर्माण अनि बालेनको उदयमा समेत सञ्जालको हात महत्वपूर्ण देखिएको छ। एमाले र बालेनको वाक्युद्धको तुलनात्मक अध्ययनमा केही सन्दर्भ सहयोगी हुन सक्छन्।

सहयोगी सन्दर्भ

गएको निर्वाचनमा एमाले पार्टीले पाएको जम्मा सिट अघिल्लो निर्वाचनको तुलनामा केही घट्यो। 'मिसन ग्रास रुट'मा भएको सदस्यता नवीकरणको संख्या पनि निराशाजनक देखियो। २०७४ भन्दा २०७९ को निर्वाचनमा लोकप्रिय मत समेत पाँच लाखभन्दा बढीले घट्यो। प्रतिनिधिसभाको पहिलो उपनिर्वाचनमा एकजना पनि प्रतिस्पर्धी विजयी भएनन्। काठमाडौँ महानगरको चुनावमा एमालेकै उम्मेदवारलाई बालेनले फराकिलो मतान्तरले पराजित गरेका हुन्। एमाले गढ भत्किएको पनि हो।

सामाजिक सञ्जालमा पनि बालेनका २१ लाख आसपास र ओलीका ६ लाख आसपास फलोअर्स देखिन्छन्। तर के एउटा महानगरको प्रमुखसँग नै यसरी थुर्थुर हुनुपर्ने गरी खण्डहर भएको छ र एमाले ? हिजो व्यवस्थाका विरुद्ध, सामन्तवादका विरुद्ध लडेको एमाले व्यक्तिका विरुद्धमा किन छ ? कतै बालेनको सत्तोसराप गर्ने नाममा एमाले प्रतिगमनमैत्री हुँदै गएको त होइन ? बालेनसँगको वाक्युद्ध उसकै लागि अहितकारी बन्दै त छैन ?

सिङ्गापुर र स्विट्जरल्यान्ड बनाउने भन्ने नेताहरूले नेपाललाई दक्षिण एसियाकै गरिब देश बनाइसकेछन्। एउटा राजनीतिक दलको चिन्ता त यतातिर पो हुनुपर्ने होला, तर एउटा स्थानीय तह र यसको प्रमुख किन उसको प्रधान शत्रुजस्तो देखिँदै छ ? बालेन एक्लै बलियो भएर एमाले बराबर अथवा एउटा राष्ट्रिय पार्टी, देशको सत्ताको नेतृत्वकर्ता शक्ति, सरकार प्रमुख बराबर भएका हुन् ? कि एमालेचाहिँ खस्किएर एउटा व्यक्ति, एउटा स्थानीय तह बराबरमा झरेको हो ? निर्मम समीक्षाको घडी आएको छ।

एमालेले साँच्चै गल्ती गरेको छैन, केही कमजोरी गरेको छैन, बालेनले भनेका कतिपय आरोपमा एमाले सम्मिलित छैन भने देशका मुख्य विषयमा चाहिँ उसको ध्यान जाओस्। देशको विकास भएको छ कि छैन ? देश बस्न लायक छ कि छैन ? विदेश जानेहरूको लर्को किन बढेको छ ? निकट भविष्यमा देशको अवस्था सहजता अथवा असहजता उन्मुख के हुन्छ ? भ्रष्टाचार गरेको छैन भनेर कोही कुनै ओहोदामा बसेको मानिसले भन्दा उसप्रति किन विश्वास जाग्दैन ? देशमै बसेर केही गर्नुपर्छ भन्ने विश्वास र संकल्प बोकेको मानिसलाई कुनै काम दिएर सरकारी अफिसमा पठाइदिएपछि बेलुका फर्कंदा ऊ यो देशमा बसेर काम छैन भन्ने सोच निर्माण गरेर किन आउँछ ? सेवाप्रवाह र सेवाग्राहीमाथिको सरोकारवाला निकाय अनि नियामक व्यक्तिको आचरण तथा सोच नोकरशाही पद्धतिको किन छ ? उत्पादन, आत्मनिर्भरता अनि निर्यातमा हामी अति धेरै जीर्ण भइसक्यौं, कसरी यसलाई सबल बनाउने ? एमाले जतिको पार्टी र ओलीजतिको प्रधानमन्त्रीको ध्यान यी कमजोरी ठेगान लगाउन हुनुपर्छ कि बालेनसँग टकराब र कुस्ताकुस्ती गर्न ?

बालेन एक व्यक्तिले गर्दा सिंगो पार्टी हल्लिनुपर्ने ठाउँमा आइपुगेपछि अब एमालेले कहिले देशका यी जल्दाबल्दा समस्याका बारेमा दिमाग खियाउने ? प्रतिस्पर्धीलाई कमजोर नसम्झनु भन्ने त राजनीतिक प्रशिक्षणका बेला आम नेता तथा कार्यकर्तालाई भनिएको होला। तर युद्ध कौशल र तयारी प्रतिस्पर्धीको तह अनि हैसियतको मात्र हुनुपर्छ होला ! एक मेयरका विरुद्ध एक प्रधानमन्त्री, केवल एक व्यक्ति विरुद्ध पूरै एउटा पार्टीको अवस्थाले चाहिँ शंकाको अजङ्ग पहाड बनाएको छ। एमालेले आत्मविश्वास गुमाएको हो कि भन्ने प्रश्न जन्माएको छ। व्यक्तिसँग त्रसित हुनुपर्ने गरी धराशायी भइसकेको हो त भन्ने दुविधा उत्पन्न भएको छ। अब नागरिकले अरुलाई नै पत्याउन थाले भन्ने ज्ञात भएकाले चिन्तित भएको हो कि ?

हुन त विदेश भ्रमणमा जानुपर्ने कार्यक्रम भएका विश्वविद्यालयका एकजना उपकुलपतिलाई तत्काल भ्रमण नगर्नु भन्न नसकेर स्वयं कुलपतिले आफ्नो कार्यालयमा बोलाएर बन्धक बनाई समय गुजारिदिएको नजिर भएको पार्टी पनि हो एमाले।

यो पंक्तिकार बालेन वा ओली दुवै वा कुनै पक्षको पक्षपोषणमा कदापि छैन, उनीहरूबीच असहमति र बेमेलता बढोस् भन्ने चाहँदैन। आपसी अहंकार र अभिमानले देशमा अर्को द्वन्द्व सिर्जना गर्न सक्छ भन्नेमा सजग छ। यद्यपि एमालेले आफैंलाई यति कमजोर महसुस गरेकामा अथाह दुखित छ। लोकतान्त्रिक व्यवस्थामा दलहरू कमजोर हुनु समग्र प्रणालीमाथिको खतराको घन्टी हो। एमाले एक सशक्त दल बनोस्। बालेनको विरोधलाई उपलब्धि मान्ने होइन, करोडौं जनताको पक्षमा काम गर्ने लोकतान्त्रिक शक्ति बनोस्। कमजोर नदेखियोस् र नबनोस्। बालेन र बा दुवै सञ्जालमा सशस्त्र बन्ने होइन, क्षेत्राधिकार भित्रका नागरिकका सेवामा समर्पित र समाहित बनून्।

रातोपाटीबाट

# बिभेदकारी कार्यले सहकारीमा संकट बढ्दो

नियमक निकार्यले सहकारीमा बचत गर्नेहरुको बचत फिर्ता गर्नु पर्ने एकसरो मागलाई सम्बोधन हुनेगरी आफ्ना गतिबिधीहरुलाई केन्द्रीत गरेको छ । कारबाहीको सिफारिस गरयो अनि सहकारीका सञ्चालकलाई पक्राउ गरेर उनीहरुलाई कारागार पठाएपछि हाम्रो दायित्व पुराभयो जस्तो गरि गतिबिधी गरिरहेका छन । सहकारीले सदस्यबाट रकम जम्मा गरेर सदस्यहरुलाई नै लगानी गर्ने हो त्यसले नियामक निकायले त सहकारीलाई सहजीकरण गरिदिने ऋृण असुल हुन नसकेको ठाउँमा सहयोग गर्ने कानुनी बाधा अडचन भए सहजीकरण गरिदिने यसो गरेमा सहकारीले लगानी गरेको रकम उठने र बचत कर्ताहरुलाई रकम फिर्ता गर्न सहज हुने थियो । आम नेपालीलाई सहकारीमा बचत गर्न प्रोत्साहन गर्ने खालका कार्यहरु नियामक निकायहरुले गर्न प्रयास गर्ने हो भने सहकारीको संकट समाधान गर्न धेरै समय लाग्दैन ।



बिष्णु निश्चल

सहकारी क्षेत्रमा देखिएको संकटले देशको समग्र अर्थतन्त्र तथा समाजलाई नै असर पारेको छ । कुनै न कुनै रुपमा समाजमा रहेका हरेक बर्ग र तह र तप्काका आम मानिस सहकारी क्षेत्रमा जोडिएका छन । कोही सहकारीमा बचत गरेर या कोही सहकारीको माध्यमबाट ऋृण लिएर यसमा जोडिएका छन् । कोही कसैको आफ्न्तको रकम सहकारीमा फसेर तनाबमा परेको देखिन्छ । तर यसको उचित समाधानको लागि नियामक निकार्यले प्रभावकारी रुपमा कदम चालेको देखिदैन । नियमक निकार्यले सहकारीमा बचत गर्नेहरुको बचत फिर्ता गर्नु पर्ने एकसरो मागलाई सम्बोधन हुनेगरी आफ्ना गतिबिधीहरुलाई केन्द्रीत गरेको छ । सहकारीमा रकम अपचलन भएको छ बचतकर्ताको रकम जसरी नि फिर्ता गराउनु पर्छ भनेर नियामक निकायदेखी राजनीतिक दलका नेता सम्म लागेको देखिन्छ। सहकारीको मुल उदेश्यनै सानो सानो रकम जम्मा गर्ने अनि आफ्नै सदस्यहरुलाई लगानी गर्ने हो । बचत संकलन भयो लगानी पनि भयो तर त्यो समयमै उठन नसक्दा अहिलेको समस्या आएको हो । नियामक निकायले जसरी बचत फिर्ताको लागि काम गरिरहको छ त्यसैगरी सहकारीले लगानी गरको ऋृणीहरुबाट लगानी उठाउनको लागि पहल गरेको देखिदैन । बरु उल्टै यो प्रकृया पुरा भएको छैन भनेर सहकारीलाई नै दुःख दिने गरेको छ। सहकारी क्षेत्रले आफुले सञ्चालन गरेको सहकारीको घर भाडा देखि राज्यलाई तिर्नु पर्ने सबैकर तिरको कुरालाई नियामक निकायले बिर्सीएको छ । कारबाहीको सिफारिस गरयो अनि सहकारीका सञ्चालकलाई पक्राउ गरेर उनीहरुलाई कारागार पठाएपछि हाम्रो दायित्व पुराभयो जस्तो गरि गतिबिधी गरिरहेका छन । सहकारी सञ्चालनमा कस्को भूमिका कति कसैको नाम मात्र राखेर पनि दुईचार जना मान्छेले सहकारी चलाएका छन ति नाम मात्रैका सञ्चालकलाई उनि उतिकै कारबाहीको सिफारिस गरेको छ त्यसमा पनि कस्को भूमिका कति छ त्सको लेखाजोखा हुनुपर्छ सम्लग्नता नदेखिए कारबाहि गरि नुहुन्न यस तर्फ पनि नियामक निकायको ध्यान जान जरुरी छ ।

सहकारीले रकम जम्मा गरेर सदस्यहरुलाई नै लगानी गर्ने हो त्यसले नियामक निकायले त सहकारीलाई सहजीकरण गरिदिने ऋृण असुल हुन नसकेको ठाउँमा सहयोग गर्ने कानुनी बाधा अडचन भए सहजीकरण गरिदिने यसो गरेमा सहकारीले लगानी गरेको रकम उठने र बचत कर्ताहरुलाई रकम फिर्ता गर्न सहज हुने थियो । आम नेपालीलाई सहकारीमा बचत गर्न प्रोत्साहन गर्ने खालका कार्यहरु नियामक निकायहरुले गर्न प्रयास गर्ने हो भने सहकारीको संकट समाधान गर्न धेरै समय लाग्दैन । केही सहकारीहरुका सञ्चालकहरुले सहकारीको बचतलाई आफुखुशी लगानी नगरेका भने हैनन तर त्यस्ता सहकारी थोरै छन । तर अधिकास सहकारीले बचत रकम संकलन गरेर सदस्यहरुमै लगानी गरेका छन । अहिले पनि सबै सहकारी जोखिममा छैनन् । जोखिममा भएको भनिएका सहकारीको संख्या सानो छ । सरकारले सहकारी दर्ता गर्ने तर नियमन गर्ने क्षमता विकास नगर्ने काम गरेको छ । समस्यामा परेका सहकारीले आफ्नो अवस्थाको बारेमा बास्तबिकता आफ्ना सदस्यहरुलाई दिउन ऋृण लगानी उठाउने र संस्थाको चल अचल सम्पतिको ब्यबस्थापन गर्न एक दूई बर्ष दिने हो भने यो समस्या समाधान हुन्छ ।

समुदायमा आधारित, सदस्यकेन्द्रित भएर कारोबार गरेका, गरिरहेका, सदस्यको विश्वास जितेका, सहकारीको मर्म, मूल्य-मान्यता र सिद्धान्तलाई व्यवहारमा उतारेर काम गरेका सहकारीहरूमा कुनै समस्या छैन । ह्नत सहकारी क्षेत्रले राष्ट्रको कुल ग्राहस्थ उत्पादनमा ३ प्रतिशत हाराहारीमा योगदान गरिरहेको यस क्षेत्रले प्रतक्ष्य अप्रत्यक्ष गरी लाखौलाई रोजगारी सृजना गरेका छन यो कुरालाई पनि हामीप्ले भुल्नु हुदैन । सहकारीले सहकारीको वित्तीय सिद्धान्त र नियमअनुसार व्यवस्थापकीय कार्य सञ्चालन गर्न नसक्दा, व्यवस्थापकीय क्षमता भएका कार्यसञ्चालन समुह निर्माण गर्न नसक्दा, ऋृण लगानीमा अनावश्यक राजनीतिक हस्तक्षेप हुँदा, खास लगानी क्षेत्र र त्यसको प्रकृति नछुट्याई ऋृण परिचालन गर्दा, त्यस्ता क्षेत्रमा गरेको लगानीको साँवा र लगानी फिर्तामा ढिलाइ हुँदा, ऋृण परिचालन र लगानी उठाउनमा जिम्मेवार नबन्दा, केन्द्रीय नियमन निकाय र स्थानीय सहकारी सञ्चालन प्रक्रिया बीच समन्वय अभाव हुँदा सहकारी क्षेत्रको ठुलो सम्भावना हुदै गर्दा पनि सहकारी संकटमा परेका हुन् । सहकारीमा साना वर्गका परिवार, व्यक्ति को बचत छ तर लगानी भने सम्पन्न , पहुँचवाला, ठूला लगानी गर्न सक्ने ठूला व्यवसायी, धनाढ्य, रियल स्टेटवालाको नै बढी हालीमुहाली देखिन्छ । सकारीको समस्या समाधानको लागि राज्यले सहकारी सञ्चालनसँग सम्बन्धित कानुनी व्यवस्थालाई संशोधन गरेर वा नयाँ आवश्यक कानुन निर्माण गरेर खराब ऋृण उठाउनेतर्फ लाग्नुपर्छ भने ऋृण उठाउनको लागि ऋृणीको चलअचल सम्पत्ति जफत गर्ने कानूनी आधार बनाएर ती सम्पत्ति लिलाम गरेर लगानी कर्ताको बचत सुरक्षाको सुनिश्चितता गर्ने तर्फ अग्रसर हुनुपर्छ । सहकारी संस्थाहरू समस्याग्रस्त हुनुको कारण उनीहरूको सम्पत्ति र दायित्वबिच अवधिको असन्तुलन नै हो । बचतको अवधि गणना गरेर ऋृणमा परिचालन गर्नुपर्नेमा अन्य विभिन्न व्यवसाय, स्थिर सम्पत्तिहरू, घरजग्गाजस्ता अचल सम्पत्तिहरूमा लगानी गरेर समस्या आएको यो यसलाई केही समय दिन सके आफै समस्याको समाधान हुन्छ ।

# अध्ययनका लागि अफगानिस्तानबाट पलायन महिलाहरू



एजेन्सी । अफगानिस्तानमा तालिवानी सरकार बने यता महिला, बालिका तथा किशोरीहरूलाई विद्यालय जान प्रतिबन्ध लगाएको छ । अफगानिस्तानका कयौँ सार्वजनिक स्थानमा पनि यस्तै प्रकारको प्रतिबन्ध लगाइएको छ ।

विद्यालय जान रोक लगाइएपछि महिलाहरू अफगानिस्तान छाडेर अन्य देशमा गई अध्ययन गरिरहेका छन् । यिनैमध्येकी एक हुन् २२ बर्षीया 'माह'। तालिवानले राजधानी काबुलमा घुसपैठ गरेपछि उनी २०२१ अगस्टमा देश छाडेर भागेकी थिइन् ।

उनी अहिले बेलायतमा अध्ययन गरिरहेकी छिन् । 'म सुरक्षित छु, स्वतन्त्र छु र आफ्नो लागि खुशी छु' बिबिसीसँग उनले भनिन्, 'तर यतिखेर मेरा साथी अफगानिस्तानमा छन् जो पढ्नका लागि केही गर्न सक्दैनन् ।' माह जस्तै १७ बर्षकी अकदास पनि अफगानिस्तान छाडेर अमेरिका पुगिन् । उनले न्यू मेक्सिकोको एउटा कलेजमा छात्रवृत्ति पाएकी छिन् । तालिवानले काबुलमा कब्जा जमाएको दिन सम्झँदै अकदास भन्छिन्, 'के उनीहरूले मेरो अधिकार खोस्नेछन्, मैले पनि मेरी आमाले २० बर्षअघि भोगेको जस्तै हिंसा भोग्नुपर्नेछ ? यस्तै प्रश्नहरू जन्मिए तर, के गर्ने सोच्नै सकिन ।' उनकी आमा रुँदै 'अब तालिवानका कारण पढाई जारी राख्न सकिन्न' भन्दै थिइन् ।

तर अकदासले लुकिछिपी अनलाइनको माध्यमबाट पढाई जारी राखिन् र अमेरिकाको लागि स्कलरशिप पाइन् । भिसा चाहिने भएपनि अफगानिस्तानमा दूतावास बन्द थियो । महिला एक्लैलाई देश छाड्ने अनुमति नभएका कारण उनी मेडिकल भिसामा आफ्ना बुबासँग पाकिस्तान पुगिन् ।

'अफगानिस्तानमा केटीहरू हरेक दिन डिप्रेशन र एन्जाइटीको शिकार भइरहेका छन् तर उनीहरूले कुनै सहयोग पाइरहेका छैनन', उनले भनिन् । तालिवानले करिब ३ बर्षदेखि अफगानिस्तानमाथि नियन्त्रण जमाएको छ र यसक्रममा महिलाहरूको जीवनमा बन्देजहरू बढिरहेको छ । महिला र १२ बर्षभन्दा माथिको उमेरका बालिकाहरूमाथि विद्यालय जान प्रतिबन्ध लगाइएको छ । उनीहरूलाई धेरैजसो विश्वविद्यालयको प्रवेश परीक्षामा बस्नै रोक्ने गरिन्छ । महिलाहरूलाई काम गर्न रोक लगाइएको छ भने ब्युटीपार्लर, सैलुन बन्द गराइएको छ र किशोरी तथा महिलाहरू पर्क, जिम र स्पोर्ट्स क्लब जान पाउँदैनन् ।

तालिवानले धार्मिक मुद्दाको कारण प्रतिबन्ध लगाइएको र सबै मुद्दा सल्टिएपछि महिलाहरूलाई फेरी भर्ना दिने वाचा गर्दै आएको छ । तालिवानले पाठ्यक्रम इस्लामिक हुने पनि बताएको छ । तर अहिलेसम्म प्रतिबन्ध फुकुवा गर्ने सम्बन्धमा कुनै प्रगति भएको छैन । यसप्रकारको प्रतिबन्ध लगाइएको अफगानिस्तान एकमात्र देश हो ।

# मोबाइल-कम्प्युटर धेरै चलाउँदा हुनसक्छ बिर्सिने समस्या



काठमाडौं । 'डिजिटल डिमेन्सिया' स्मार्टफोन, कम्प्युटर जस्ता डिजिटल उपकरणको अत्यधिक प्रयोगले स्मरण क्षमतामा आउने ह्रास तथा समस्या हो । हाम्रो दैनिक जीवनमा प्रविधिको प्रयोगमा वृद्धि भएको छ । यसैले हाम्रो मानसिक स्वास्थ्यमा निम्त्याउन सक्ने कुनै पनि सम्भावित हानिबारे जान्न आवश्यक छ । खासगरी डिजिटल उपकरणमा अत्यधिक निर्भर हुँदा यस्ता समस्या निम्तिन सक्छन् भन्ने थाहा पाउन जरुरी छ ।

सन् २०२२ मा गरिएको एक अध्ययनले डिमेन्सियाको जोखिम र आसीन गतिविधि (भौतिक काम नगरी टेलिभिजन हेर्नु, कम्प्युटर प्रयोग गर्नु लगायतका गतिविधि) को सम्बन्धबारे अनुसन्धान भएको थियो । त्यसले के देखाएको थियो भने जति बढी हामी आसीन गतिविधिमा भुल्छौं, त्यति नै डिमेन्सियाको जोखिम बढी हुन्छ ।

यही विषयमा भएको अर्को अध्ययनले जो मानिसहरू दैनिक चार घण्टाभन्दा बढी स्क्रिनमा समय बिताउँछन्, उनीहरूमा भास्कुलर डिमेन्सियाको जोखिम उच्च हुने देखाएको थियो । भास्कुलर डिमेन्सिया त्यस्तो जोखिम हो, जहाँ मस्तिष्कमा रगतको बहाव कम हुन्छ । यसले गर्दा मस्तिष्कमा हुने कोषिका बिग्रिन पुग्छन् । त्यसबाहेक रगतको प्रवाह बन्द हुने समस्या हुनु पनि भास्कुलर डिमेन्सिया हुनु हो । यसलाई अल्जाइमर्स रोग पनि भन्ने गरिन्छ ।

जति बढी स्क्रिन टाइम (मोबाइल, ल्यापटप, टिभी जस्ता डिभाइसका स्क्रिनमा व्यतीत गर्ने समय) भयो त्यति नै मस्तिष्कको विभिन्न भागमा परिवर्तन आउँछन् । त्यस्ता परिवर्तनले डिमेन्सियाका लक्षण देखा पर्न थाल्छन् । उदाहरणका लागि डिमेन्सिया हुँदा व्यक्तिले कुराहरू भुल्ने, बोल्दा कुन शब्द निकाल्ने भन्ने बिर्सिने र एकै पटक एकभन्दा बढी काम सँगसँगै गर्न खोज्ने समस्या देखा पर्छन् ।

लगातार मल्टी टास्किङ र छिटो सूचना प्रशोधन हुँदा स्मरण क्षमता घट्ने, ध्यान दिन सक्ने अवधि घट्ने र सिकाउने क्षमतामा कमी आउने हुन सक्छ । यसले तनाव र चिन्ता बढाएर व्यवहारमा प्रभाव पार्न सक्छ ।

स्क्रिनबाट निस्किने ब्लु लाइटले निद्राको चक्रमा समेत बाधा पार्छ । यसले मेमोरी कन्सोलिडेसन (यस्तो प्रक्रिया, जहाँ मस्तिष्कले नयाँ जानकारी लिन्छ र पछि आवश्यक परेको बेला सम्झिनको लागि भण्डारण गरेर राख्छ) र कग्निटिभ फङ्सन (सोच्ने, सिक्ने, तर्क गर्ने र सम्झिने लगायतका गतिविधि) मा समेत असर पार्ने अनुसन्धानको अध्ययनबाट पुष्टी भएको दाबी छ । त्यसबाहेक एकै पटक दुई वा सोभन्दा बढी डिभाइस प्रयोग गर्दा ध्यान केन्द्रित गर्न पनि समस्या हुने गर्छ ।

डिजिटल स्रोतहरूले हाम्रो मस्तिष्कलाई आवश्यकता भन्दा बढी सूचना दिइरहेका हुन्छन् । यसले गर्दा मस्तिष्कमा सूचनाको चाप बढी हुन्छ । सूचनाको चाप बढी हुँदा शरीरलाई डिजिटल डिमेन्सिया विरुद्ध लड्न गाह्रो हुने बताइन्छ । डिजिटल डिमेन्सिया विरुद्ध लड्न र अत्यधिक स्क्रिन टाइमका कारण सिर्जना हुने जोखिम घटाउन निम्न प्रक्रिया अपनाउन सकिन्छ ।

१) फोनको नोटिफिकेसन अफ गर्ने

स्क्रिन टाइम घटाउने सबैभन्दा उपयुक्त तरिका हो, 'नोटिफिकेसन अफ' । अत्यधिक प्रयोग गर्ने एपको नोटिफिकेसन तपाईंले अफ गर्नु भयो भने अवश्य पनि सो एपमा बिताउने समय घट्छ ।

२) टाइम लिमिट अर्थात् समय सीमा तय गर्ने

कतिपय एपमा कसरी समय बित्छ, मान्छेलाई पत्तै हुँदैन । उदाहरणका लागि टिकटक भिडिओ, युट्युब शर्ट्स, फेसबुक र इन्स्टाग्राम रिल्स आदि हेर्दै हुनुहुन्छ भने तपाईंले समय बितेको पत्तै हुँदैन । यदि तपाईंले एपमा टाइम लिमिट सेट गर्नुभयो भने समय सकिएपछि एपले त्यसको जानकारी दिन्छ र, तपाईं आफ्ना अन्य काममा लाग्न सक्नु हुन्छ ।

३) ब्रेक लिने

कतिपयको काम नै स्क्रिनमा निर्भर हुन्छ । त्यसैले स्क्रिन टाइम घटाएर आफूलाई स्वस्थ राख्छु भन्ने कुरा पेसाको कारणले पनि सम्भव नहुन सक्छ । त्यस्तोमा समय समयमा ब्रेक लिने बानी बसाल्न सक्नु हुन्छ । सामान्यतः स्क्रिन टाइम बढी हुँदा निम्तिने जोखिम कम गर्न २०-२०-२० नियम उपयुक्त हुन्छ । यो भनेको हरेक २० मिनेटमा पाँचदेखि दश सेकेन्ड ब्रेक लिनु हो । त्यस्तै २० फिट (छ मिटर) टाढाबाट स्क्रिनमा हेर्ने र हरेक २० सेकेन्डमा आँखा झिम्क्याउने अभ्यास गर्नुपर्छ । लामो समय स्क्रिनमा केन्द्रित हुँदा हाम्रो आँखा झिम्क्याउने अन्तराल बढी भइरहेको हुन्छ । त्यसैले बढीमा हरेक २० सेकेन्डमा आँखा झिम्क्याउनु पर्छ ।

४) स्क्रिनमा मनोरञ्जनको समय घटाउन टाइम सेट गर्ने

हामी कामका अलावा मनोरञ्जन पनि डिजिटल डिभाइसको स्क्रिनमै लिइरहेका हुन्छौं । खासगरी स्क्रिनमा मनोरञ्जनका सामग्री हेरिरहेका हुन्छौं । यस्तोमा काम सँगसँगै मनोरञ्जनका लागि पनि स्क्रिन टाइम बढी हुन्छ । त्यसैले मनोरञ्जनका लागि वैकल्पिक तरिका खोज्न सक्नुहुन्छ । उदाहरणका लागि पुस्तकको पीडिएफ पढ्नुभन्दा भौतिक पुस्तक नै पढ्न सक्नुहुन्छ । डिजिटल वा अनलाइन गेम खेल्नुभन्दा भौतिक गेम खेल्न सक्नुहुन्छ ।

५) स्क्रिन टाइम र डिजिटल स्वस्थतामा ध्यान दिने

एप्पलका डिभाइसमा तपाईंले कुन एप कति प्रयोग गर्नुभयो भन्ने जानकारी स्क्रिन टाइममा देखिन्छ । त्यस्तै एन्ड्रोइड डिभाइसमा एपमा बिताएको समय डिजिटल वेलबिङमा देखिन्छ । तपाईंले हरेक दिन आफूले कुन एपमा कति समय बिताएँ भन्ने विषय निगरानी गरेर त्यसलाई निरन्तर घटाउँदै लैजान सक्नुहुन्छ ।

# "शेयर" बजार बुलमा हुने भूल

- अचुतकुमार ओझा

काठमाडौं । 'शेयर'को बुल (बढ्दो) बजारको लहर चल्दै गर्दा लगानीकर्ता र कारोबारी मात्रै नभई सिङ्गो राज्य संयन्त्र उत्साहित हुनु स्वाभाविक हो । यसले अर्थतन्त्रलाई चलायमान मात्र बनाउँदैन, राज्यकोषलाई समेत सबल बनाउन मद्दत गर्छ । पुराना र अनुभवी व्यक्ति र संस्था मात्रै नभई नयाँ लगानीकर्ताहरु समेत बजारमा प्रवेश हुने गर्छन् । कारोबार रकम, सूचकाङ्क र लगानीकर्ताहरुको 'पोर्टफोलियो' सबै बढ्दै गएका सूचना र समाचारहरुले मिडियाहरु रङ्गिएका हुन्छन् ।

सामाजिक सञ्जाल, चोक बजार र बस्तीहरु शेयर बहसले तताएको हुन्छ । यसको प्रभाव सामान्य व्यक्तिदेखि बौद्धिक र व्यवसायीसम्म पर्न पुग्छ । यसरी सबै तह तप्कामा सकारात्मक माहोल बन्दै गर्दा लगानीकर्ताले शेयर बजारमा हुने विपत्ति बिर्सिसकेका हुन्छन् । यस्तो परिस्थितिमा नयाँ, कम अनुभवी र अनुभवीले समेत आफ्ना अनुशासन तथा रणनीति बिर्सिएर गर्ने व्यवहारका कारण धेरै भूल हुने गर्छ । त्यसलाई जान्न आवश्यक छ ।

बढ्छ बढ्छ

शेयर बजार जब बुल लयमा हुन्छ । लगानीकर्ता होस् वा कारोबारी हरेकले बजार घट्ने कुरा भुलेका हुन्छन् । लामो समयसम्म घटेको बजार नदेख्दा दिमागको स्मरण शक्तिले बजार ओरालो पनि जान्छ भन्ने कुरा बिर्सिसकेको हुन्छ । यस्तो बजारमा हरेक दिन शेयर बजारमा जोडिएका व्यक्ति बजारले अझै नयाँ उचाइ बनाउने विश्वास बोकेर कुरिरहेका हुन्छन् । तर यथार्थ के हो भने सगरमाथाको चुचुरो धेरैले थुप्रै पटक चुमिसके एकजना व्यक्ति पनि अहिलेसम्म टुप्पोमा बसिराख्न सकेका छैनन् । सबैले ओर्लिन परेको छ । शेयर बजारको बुल पनि सगरमाथा चढे जस्तै हो एउटा विन्दुमा पुगेपछि झर्नै पर्छ । बुलको राप, ताप, बढेको पोर्टफोलियो, बनेको सकारात्मक भाव र मिडियामा आएका समाचारलगायत माहोलले मानिस बजार अझै बढ्ने र धेरै कमाउने लोभको लतले बेच्नै बिर्सन्छन् । यसैले बजार बढी मात्रै रहँदैन, यो घट्छ भन्ने नभुलौं ।

तल बेच्ने माथि किन्ने

बुल बजार कैयौँपटक पुतलीलाई लोभ्याउन बत्ती बाले जस्तै हो । खासगरी नयाँ र अनुभव कम रहेका लगानीकर्ताको हकमा बुल बजारले यसरी आकर्षित गर्छ छिमेकी, साथी, पसले, अफिस र आफन्त हरेकले प्रत्येक दिन यति कमाए भनेको सुनेरै बजारमा जोडिन पुग्छन् । कसैलाई सोधेर शेयर किन्छन्, कसैले भन्देकै भरमा नाफा हुन्छ बिक्री गर्छन्, फेरि कसैले भन्छ अझै बढ्छ रे, यति पुग्छ रे, उति पुग्छ रे, पहिला आफूले बेचेको शेयर फेरि माथि गएर आफैले किन्छन् । यही प्रक्रिया चलिरहँदा अन्तिमपटक खरिद गरिएको शेयर बिक्री गर्न छुट्दा सम्पूर्ण धन डुब्न सक्छ ।

उदाहरणका रुपमा हेरौं कसैले 'क' कम्पनीको शेयर रु तीन सयमा किनेर रु चार सयमा बिक्री गर्छ, फेरि कसैले भन्छ ' क' कम्पनीको शेयर रु आठ सय पुऱ्याउने कुरा छ, फलानो समूह वा खेलाडीले उठाउन थाल्यो किन्दा हुन्छ । आफैँले बेचेको शेयर पुनः रु पाँच सयमा किन्छ । उक्त कम्पनीको मूल्य रु सात सय पुग्छ, कसैले भन्छ बजार घट्ला जस्तो छ बेच्दा हुन्छ, त्यसैका आधारमा बेचिन्छ । केही दिन बजार 'करेक्सन' हुन्छ । फेरि बढ्न थाल्छ । उक्त कम्पनीको मूल्य रु नौ सय पुग्छ । फेरि उसैले भन्छ रु एक हजार तीन सय पुऱ्याउने कुरा छ किन्दा हुन्छ । उसैगरी किनिन्छ तर बजार केही माथि त पुग्छ तर बिक्री गर्न नपाउँदै घट्न थाल्छ र बजारले बियरिस ९घट्दो० लय समात्न थाल्छ । यसपछि त्यस्ता लगानीकर्ताले कि त घाटामा बिक्री गरेर निस्कनुपर्छ कि त अर्कै बुल कुर्नुको विकल्प हुँदैन । यसैले बुल बजारमा तल बेच्ने माथि किनेर पनि कमाउन सकिन्छ भन्ने भ्रमबाट बच्ने रणनीति हरेकले बनाउन आवश्यक छ ।

खरिद गर्न नपाइने अत्यास

बुल बजारमा खरिदकर्ता यति धेरै भोकाएका हुन्छन् । बिक्रेताले जुन दरमा शेयर बिक्री गर्न चाहन्छन् । त्यही दरमा खरिद गरिदिन्छन् । पैसा बोकेर बसेका क्रेता बजार बढेको देखेर आफूले कमाउने अवसर



गुमाएकामा पश्चातापको अनुभूति गरिरहेका हुन्छन् । माग यसरी बढ्छ कैयौँपटक आपूर्ति शून्य हुन्छ । लगानीकर्ता बजारमा छिर्न ढिलो भएकामा थकथक मानिरहेका हुन्छन् । न खरिद कर्ता न बिक्रेता दुवै पक्ष बजार रकेट गतिमा अझै अगाडि जाने विश्वास गरेर शेयर जम्मा गर्न चाहन्छन् । यसले गर्दा बजारमा शेयर अभाव हुन पुग्छ र यो सधैँ रहिरहने विश्वास यति बलियो भएर जान्छ ।

मानिस शेयर आफ्नो हातबाट फुस्कन नदिन कर्जा लिएर बजारमा उत्रिन्छ । खरिद गर्न नपाइने अत्यासले लगानीकर्ता निराश हुन्छन् र जुनसुकै मूल्यमा छिटोछिटो शेयर उठाउन थाल्छन् । यो एउटा भ्रम हो । बजार करेक्सन हुन्छ नै, शेयर खरिद गर्ने अवसर बजारले दिन्छ नै तर बुल बजारले शेयर खरिद गर्न पाइँदैन भन्ने अत्यास देखाएर नयाँलाई मात्र नभई अनुभवी लगानीकर्तालाई समेत भूलमा पारिदिन सक्छ ।

बुलमा जान्नु र छान्नु पर्दैन

बुल बजारमा आमबुझाइ नै 'सबै शेयरको मूल्य बढ्छ', 'जुन कम्पनीको शेयर लिए पनि हुन्छ', 'बुलमा छानिरहनु पर्दैन', 'बरु छिटो किन नत्र महङ्गोमा परिएला' भन्ने रहेको पाइन्छ । यस्तो बजारमा कैयौँपटक आधारभूत पक्ष बलियो भएका कम्पनीको भन्दा कमजोर कम्पनीको मूल्य उच्च हुने गर्छ, भएका पनि छन् । चाहे त्यो बजारमा गलत सूचना दिएर होस्, शेयर सङ्कलन गरेर होस् वा हल्ला गराएर होस् मूल्य अस्वाभाविक रुपमा बढाउने र चलखेल गर्ने गरेको पाइन्छ । यसैको लहलहैमा थुप्रै लगानीकर्ता पछि लाग्ने गरेका छन् । तर सत्य के हो भने कुनै विन्दुसम्म बढे तापनि जब बजारको बेलुनको हावा फुस्कन्छ तब ती शेयरको मूल्य आफ्नै धरातलमा फर्कन बाध्य हुनेछ । यसरी तलतिर आउँदै गर्दा राम्रा कम्पनीको मूल्य माथि नै बस्ने छभने खराब कम्पनीको मूल्य भुइँमा आउने निश्चित छ । एउटा स्तरबाट माथि लागेपछि लगानीकर्ताले खोजीखोजी छानेर राम्रा शेयर मात्र खरिद गर्ने हुँदा सबै कम्पनीका शेयरको मूल्यसँगसँगै बढ्न सम्भव छैन । यसैले बुल होस् वा बियरिस होस् सबै अवस्थामा उत्तम कम्पनी छानेर शेयर किन्ने गर्नुपर्छ ।

कम पुँजी भएका कम्पनीमा उचालिनु

बुल बजारमा लगानीकर्ताहरुको मनोविज्ञान धेरै, छिटो र छोटो माध्यमबाट कमाउनु हुन्छ । यसका विविध विकल्पहरु हुन सक्छ तर खतरा उच्च हुने गर्छ । लगानीकर्ताहरु यति धेरै भोकाएका हुन्छन् तातेको बजारबाट काँचो खानेकुरा पाक्ने मात्र होइन, सडेका र बिग्रेका वस्तुहरु समेत शुद्धीकरण गर्न सकिने आत्मविश्वास बोकेर लगानीलाई केन्द्रीकृत गरिरहेका हुन्छन् । खासगरी कम्पनी छनोटमा आधारभूत पक्ष सबल भएकाभन्दा पनि कम पुँजी भएका कम्पनीको बहुसङ्ख्यक शेयर सङ्कलन गर्ने र आफूले चाहेको मूल्यमा उचाल्ने र खसाल्ने ढङ्गबाट लगानी गर्ने प्रवृत्ति बजारमा विकास हुँदै गइरहेको छ । यसले कम पुँजी भएका कम्पनीको शेयर बजारमा अभाव सिर्जना गरी त्यही मौकामा मूल्य अत्यधिक वृद्धि गराएर लगानीकर्ताहरुलाई किन पहिला किनेनछु भन्ने बनाउँदै स्मार्ट लगानीकर्ताहरुले नयाँ र कम अनुभवीलाई माथिलो विन्दुमा शेयर जिम्मा लगाएर आफू विस्तारै लाभांश क्षमता उच्च रहेका, संस्थागत सुशासन राम्रो भएको र भविष्यमा थप उन्नति गर्नसक्ने कम्पनीमा सर्ने गरेको देखिन्छ ।

यसैले बुल बजारमा उच्च जोखिम बहन गर्नसक्ने र ठूलो पुँजी रहेका कम्पनीको भन्दा पनि कर्नलिङ् ९सङ्कलन० गर्न सजिलो हुने कम्पनीका शेयरमा लगानीकर्ता छिटो उच्च लाभ पाउने आशामा उचालिँदा फस्ने सम्भावना सधैँ धेरै हुनेगर्छ । लगानीकर्ताले सानो पुँजी रहेका, मूल्य अकाशिएका तर क्षमता नभएकाभन्दा पनि बलिया कम्पनी छनोट गर्न सक्नुपर्छ । शेयर बजारमा सधैँ तातो आलु अरूलाई भिडाएर आफू उम्कन्छु भन्दा आलु लिने कोही भेटिएन भने आफैँलाई पोल्न सक्छ ।

हरेक सूचनामा बहकिने

बियरिस बजारमा पनि सूचना पासोमा फसिने सम्भावना रहन्छ तर तुलनात्मक रुपमा बुल बजारमा त्योभन्दा बढ्ता छलकपट हुनसक्ने हुन्छ । बुल बजारमा नयाँ व्यक्तिदेखि अनुभव कम भएका र अनुभवी सबैमा लोभ बढ्छ । त्यसैको फाइदा उठाउँदै बजारमा अनेक किसिमका हत्थकण्डा लगाएर शेयरको मूल्य उचाल्ने खेल हुन्छ । यसको मूल उपाय सूचना पासो नै हो । यसका लागि सामाजिक सञ्जाल, सञ्चारमाध्यम, कम्पनी, नियामक वा व्यक्तिगत भेटघाट र सम्बन्धहरुको माध्यमबाट हल्ला, भ्रामक सूचना, शेयर सङ्कलन र बिक्री, शेयर मूल्य तोकेर हल्ला गर्ने, विश्लेषण सुनाउने र नीतिगत पासोहरु आदि फ्याँकेर बजारलाई जुरुक्कै बनाउने व्यक्ति, समूह र निकायहरुका जालसाजीमा लगानीकर्ता झुक्किने प्रबल अवस्था हुन्छ । यसैले आफूले पाएको सूचना कति साँचो र सत्य छ थप अनुसन्धानसहित परीक्षण गरेर मात्रै आफ्नो निर्णय प्रक्रियामा उक्त सूचनालाई प्रयोग गर्ने गर्नुपर्छ । अन्यथा सूचना पासोमा परिएर भुइँको टिप्न खोज्दा पोल्टाकै पोखिन सक्छ ।

बुल बजारमा सूचनाका माध्यमबाट ठगी गर्नेको र ठगिनेको सङ्ख्या दुवै अधिक हुनेहुँदा हरेक सूचनालाई प्रयोग गर्नु अगाडि त्यसको तथ्यलाई जाँच गर्न आवश्यक छ । किनकि सबै सूचना त्यसरी जारी गरिन्छ जहाँ सामान्य मान्छेलाई लोभ्याउने र यो नै सत्य हो भन्ने पार्न सकिने ढङ्गले डिजाइन गरेर बजारमा फ्याँकिएको हुन्छ । यसले गर्दा बुलमा हरेकलाई प्रत्येक सूचना साँचोजस्तो लाग्नु किन स्वाभाविक हो भने त्यसैका कारण आफ्नो पोर्टफोलियो बृद्धि भइरहेको हुन्छ । तसर्थ, सबै सूचना वास्तविक नहुन सक्छन् । यस्तो सूचना खेतीबाट जोगिन र सूचना पासोका कारण कुनै क्षति नहोस् भनेर बुल बजारमा लगानीकर्ता थप जागरुक हुन आवश्यक छ ।

अरूले कमाएको सुनेर बजार छिर्ने गर्नु

भारतमा एउटा भनाइ छ 'दिल्लीको रेल स्टेसनमा उभिदिए पुग्छ भीडले रेल आफैँ चढाउँछ, ओर्लने समयमा ढोका छेउमा उभिदिए पुग्छ हुलले आफैँ झारिदिन्छ ।' बुल बजारको चरित्र पनि यस्तै हो, अरूले कमाएको कहानी सुन्दासुन्दै त्यही सुनेर शेयरका बारेमा 'श' थाहा नभएका व्यक्तिहरु बजार छिर्ने गर्छन्, आफूलाई रोक्नै सक्दैनन् । बजारमा हावा यसरी आउँछ, हरेक व्यक्तिलाई आकर्षित गर्छ, एक व्यक्तिको फ्रिक्वेन्सीले अर्को व्यक्तिलाई तानिदिन्छ ।

हरेकलाई बजारले लोभ जगाउँछ, अरू धनी हुँदै गएको र आफू छुटेकामा कैयौँपटक रिस पनि उठ्छ । सके उसलाई भेट्टाउने र नसके कम्तीमा कमाउनेको नजिक पुग्ने हतारोमा मान्छे बजारमा पौडिन हम्फाल्छ तर उससँग पोखरी कति गहिरो र अप्ठेरो हुन सक्छ भनेर पौडी खेलेको अनुभव नै हुँदैन । तैपनि ऊ पनि अरूलाई भेट्टाउन र बजारलाई जित्न हतारिन्छ । यसले सिङ्गो बजार र स्वयम् व्यक्तिको निजी जीवनलाई तहसनहस बनाउन सक्छ र बनाएका थुप्रै समचार हामीले पढेका छौँ । यसैले अरूले कमाएको देखेर मात्रै बजार छिर्नुभन्दा केही सिकेर, केही जानेर र केही अध्ययन गरेर बजारमा कारोबार र लगानी गर्न जाने गरौँ । पौडी खेल्न सिकेपछि मात्रै पोखरीमा हम्फाल्यौँ भने सुरक्षित हुन सकिन्छ, नत्र सधैँ कागताली सम्भव छैन, सबैलाई चिट्ठा पर्दैन । ( लेखक शेयर बजारका जानकार हुनुहुन्छ) रासस

## बेल्जियममाथि फ्रान्सको सहज जित



एजेन्सी । युईएफए नेसन्स लिगमा फ्रान्सले बेल्जियममाथि सहज जित निकालेको छ । स्टेडियममा डिडियर डेसच्याम्प्सको घरेलु टोलीले बेल्जियमलाई २-० गोल अन्तरले पराजित गरेको हो । लिग ए समूह २ मा रहेको फ्रान्स पहिलो खेलमा इटलीसँग ३-१ ले पराजित भएको थियो ।

इटालीविरुद्ध पूरा समय मैदानमा बिताएका कप्तान केलियन एमीबाप्पे यस खेलमा भने सुरुवाती ११ परेका थिएनन् । बेल्जियमले सुरुवातमा केही राम्रा अवसरहरु बनाएपनि गोलमा परिणत गर्न सकेन । २९औं मिनेटमा कोलो मुआनीले डेडलक तोड्दै घरेलु टोलीलाई अग्रता दिलाए ।

फ्रान्सका लागि यो उनको छैठौं गोल थियो । ५७ औं मिनेटमा पेरिस सेन्ट-जर्मेन पिएसजीका ओस्मान डेम्बेलेले गोल गरेपछि फ्रान्सले २-० को अग्रता बनायो । एम्बाप्पेलाई दोस्रो हाफको मध्य तिर मैदानमा पठाइएको थियो । उनले दुई पटक राम्रो मौका पाए पनि गोल गर्न सकेनन् ।

जितसँगै ३ अंक जोडेको फ्रान्स लिग ए समूह २ को दोस्रो स्थानमा उक्लिएको छ । आफ्नो पहिलो खेलमा इजरायललाई ३-१ ले पराजित गरेको बेल्जियम ३ अंक सहित तेस्रो स्थानमा छ । सोही दिन भएको अर्को खेलमा इटालीले इजरायललाई २-१ ले पराजित गरेको छ ।

युरो २०२४ को अन्तिम १६ बाट नकआउट भएको इटालीले लगातार दोस्रो जितसहित नेसन्स लिगमा भने बलियो सुरुवात जारी राखेको छ । बोजसिक एरेनामा खेलको ३८औं मिनेटमा डेभिड फ्राटेसीले गोल गर्दै इटालीलाई अग्रता दिलाएका थिए । दोस्रो हाफमा जियाकोमो रास्पादोरी प्रहार इजरायली गोलरक्षकले जोगाएका थिए । तर ६२ औं मिनेटमा मोइस केनले गोल गरेपछि इटालीले २-० को अग्रता बनायो ।

इजरायलका लागि मोहम्मद अबु फानीले इन्जुरी समयमा उत्कृष्ट गोल फर्काए पनि जितका लागी पर्याप्त हुन सकेन । यससँगै अहिलेसम्म दुई खेलबाट ६ अंक जोडेको इटाली समूह २ मा शीर्ष स्थानमा छ ।

अन्य खेलमा टर्कीय, स्लोभानिया, रोमानीया, नर्वे र वेल्स पनि विजयी भएका छन् ।

त्यस्तै यूईएफए नेसन्स लिगमा पोर्चुगलका कप्तान क्रिस्टियानो रोनाल्डोले खेलको अन्त्यतिर गरेको गोलमा पोर्चुगलले स्कटल्याण्डलाई २-१ ले हराएको छ । स्कटल्याण्डले सातौं मिनेटमा स्टक म्याकटोमीको गोलले अग्रता लिएको थियो । त्यसपछि ब्रुनो फर्नान्डेजले पोर्चुगलका लागि बराबरी गोल फर्काए ।

रोनाल्डोले ८८औं मिनेटमा निर्णायक गोल गरे र यो उनको खेल जीवनको ९ सय १ औं गोल हो । अर्को खेलमा स्पेनले फाबिन रुइजको दुई गोलमा स्विजरल्यान्डलाई ४-१ ले पराजित गऱ्यो ।

यस्तै क्रोएसियाले पोचल्यान्डलाई १-० र स्विडेनले इस्टोनियालाई ३-० हराएको थियो ।

## स्पोर्ट्स अवार्ड – क्रिकेटका ५ मनोनयनमा

काठमाडौं । नेपाल खेलकुद पत्रकार मञ्चले पल्सर स्पोर्ट्स अवार्ड २०८० को ४ विधाको मनोनयन सार्वजनिक गरेको छ । मञ्चले वर्षको उत्कृष्ट महिला , पुरुष, युवा र प्रशिक्षक गरि ४ विधामा समान ५ जनाको मनोनयन सोमवार सार्वजनिक गरिएको छ । क्रिकेटबाट सबैभन्दा बढी ५, फुटबल र करातेबाट समान ३ जना मनोनयनमा परेका छन् । गत वर्ष राष्ट्रिय तथा अन्तर्राष्ट्रिय खेलकुदमा गरेको प्रदर्शनको आधारमा खेलाडी र प्रशिक्षक मनोनयनमा परेका हुन् ।

महिला उत्कृष्ट वर्ष खेलाडीको मनोनयनमा एरिका गुरुङ (कराते), मेनुको राजवंशी (कबड्डी), रुबिना क्षेत्री (क्रिकेट), सावित्रा भण्डारी (फुटबल) र सन्तोषी श्रेष्ठ (एथलेटिक्स) परेका छन् ।

त्यस्तै वर्ष उत्कृष्ट पुरुष वर्ष खेलाडीको मनोनयनमा अनन्त तामाङ (फुटबल), रोहितकुमार पौडेल ( क्रिकेट), दीपेन्द्रसिंह ऐरी (क्रिकेट), मोहम्मद शेखु आलम (कराते) र सुवास तामाङ (गल्फ) परेका छन् । युवा वर्ष खेलाडीको मनोनयनमा अर्जुन कुमाल (क्रिकेट), हेमन्त पाल (भारोत्तोलन), प्रीति राई (. फुटबल), सुजन गडाल (टेबलटेनिस) र सुनीरा थापा (टेनिस) परेका छन् ।

वर्ष उत्कृष्ट प्रशिक्षकको मनोनयनमा कविराज नेगी लामा (पार ा तेक्वान्दो), कुशल श्रेष्ठ (कराते), मोन्टी देसाई (क्रिकेट), पार्वती राई (कबड्डी) र सञ्जय मर्हजन (भारोत्तोलन) परेका छन् । मनोनयनमा परेका ५ जनामध्येबाट अवार्डकै दिन विजेता घोषणा गरिनेछ ।

मन्चले पिपल्स च्वाइस अवार्डको मनोनयनमा भने यसअघि सार्वजनिक गरेको थियो । युवाको विधाको मनोनयनमा परेकी फुटबलकी प्रितीसहित पिपल्स च्वाइस विधाको मनोनयनमा गुलसन झा (क्रिकेट), कविता भट्ट (भलिबल), मानमती विष्ट (कबड्डी), प् र श्रीराम श्रेष्ठ (रग्बी) छन् । उनीहरूको भोटिङका लागि प्रचारप्रसार तीव्र भइरहेको छ ।

इ-सेवाबाट भोटिङ र मञ्चको तथा मुख्य प्रायोजक हंशराज हुलासचन्द एन्ड कम्पनीको आधिकारिक फेसबुक पेज पल्सर नेपाल बाट भोटिङ जारी रहेको मन्चले जनाएको छ ।

स्पोर्ट्स अवार्डका अन्य विधा पारा एथलिट सम्मान, स्पेसल अवार्ड, लाइफटाइम एचिभमेन्ट अवार्ड र एसियन स्पोर्ट्स जर्नालिस्ट अवार्डको घोषणा भने कार्यक्रमकै दिन भदौ २८ गते प्रज्ञा- भवनमा हुने बताइएको छ । यस पटक वर्ष पुरुष, महिला, युवा र प्रशिक्षक विधाको विजेतालाई पल्सर एनएस २०० मोटरबाइक प्रदान गरिनेछ । यस्तै पिपल्स च्वाइस विधाको विजेताले पल्सर एनएस ४०० मोटरबाइक जित्नेछन् । अन्य विधाका विजेतालाई जनही १ लाख रुपैयाँ र गिफ्ट हयाम्पर प्राप्त गर्नेछन् ।

## दुई तिहाई.....

राजनीतिकरण र स्टन्टको विषय नबनाउने हो भने त ी फाइल खोल्ने काम प्रहरीको एसपी र सरकारको सहसचिवले गरे हुन्थ्यो । संसद्को पहिलो र दोस्रो दल मिलेर बनेको सरकारले जनतालाई आशा जगाउने गरी काम गर्छ भन्ने धेरैको अपेक्षा थियो । तर, सरकारको शुरूआति कार्यशैली प्रचण्ड सरकारको यथास्थितिभन्दा कुनै ढंगले पृथक छैन ।

तर नेपालको शेयर बजारमा देखिएको अल्पकालीन वृद्धिलाई लिएर सरकारका प्रधानमन्त्री-मन्त्रीले देशको अर्थतन्त्रले लय समात्यो, व्यवसायीको आत्मबल बढ्यो भनेर भाषण त गरिरहेका छन्, तर बजारमा त्यो उत्साह देखिएको छैन

शेयर बजारको फाइदा सीमित चलाख व्यक्तिले लिइरहेका छन् । मध्यम वर्गले थोरै लाभ लिए पनि आमजनतालाई त्यसले छोएको छैन । तर पुन अहिले शेयर बजार ओरालो लागेको छ । यसबाट शेयर बजारमा देखिएको सुधारको संकेत शेयर बजारका दलाल र सरकारकै मिलोमतोमा भएको आशंका गरिएको छ ।

'म कसैप्रति व्यक्तिगत टिप्पणी गर्न चाहन्नँ, तर यतिचाहिँ भन्छु कि नेपाली कांग्रेस र नेकपा एमालेले पटक-पटक काँध हाल्दा समेत अघिल्लो सरकारले गति समात्न सकेन । सरकारले थिति बसाल्न सकेन । थिति बसाल्ने रुचि पनि राखेन, जसका कारण समाजमा अनेकन दुषित परिणाम निस्किने खतरा बढ्यो । त्यसलाई टुलुटुलु हेरेर बस्न सकेनौं । यही कुरालाई आत्मसात गरी पुरानो सरकारको ठाउँमा नयाँ सरकार बनाएका हौं,' साउन ६ गते प्रतिनिधिसभामा विश्वासको मत माग्ने प्रस्तावका क्रममा ओलीले भनेका थिए । तर, ओलीले दाबी गरेजस्तो नयाँ सरकारले कुनै गति लिएको छैन । काम पनि भएको छैन र नयाँ सरकारमा स्टन्ट गर्ने मान्छे पनि छैन ।

वर्तमान सरकारलाई प्रतिनिधि सभामा दुईतिहाइ (२७५ मध्ये १८८) सांसदको समर्थन प्राप्त छ । संसद्बाट संविधान नै संशोधन गर्न सक्ने अंकगणित ओलीसँग छ । कांग्रेसजस्तो भरपर्दो र विश्वासिलो शक्ति सत्तासाझेदार छ । तैपनि सरकारको आत्मबल बलियो देखिँदैन । प्रधानमन्त्री-मन्त्रीहरू ढुकुटी रित्तो छ भनेर आफ्नो कमजोरी सार्वजनिक गरिरहेका छन् ।

कांग्रेस-एमाले गठबन्धन सरकार बनेपछि सुस्त रहेका आयोजनाले गति लिनुपर्ने हो । सरकारको ध्यान त्यता जानुपर्ने हो, तर गएको छैन । नारायणगढ-बुटवल, मुग्लिन-पोखरा सडक निर्माणमा भइरहेको ढिलासुस्तीले दशैंमा घर जाने यात्रुले व्यहोर्नु सास्ती व्यहोर्ने छन् । त्यसतर्फ सरकारको कुनै ध्यान गएको देखिदैन ।

जनताले प्रत्यक्ष भोगिरहेका समस्याभन्दा पनि प्रधानमन्त्री ओली अनावश्यक भाषण गरेर महत्त्वपूर्ण समयलाई खेर फालिरहेका छन् । उनी कहिले देशमा बंगालदेशजस्तो अस्थिरता निम्त्याउने प्रयास भइरहेको आरोप लगाउँछन् त कहिले विपक्षी दलका नेतालाई 'राउन्ड किक हानेको' भनेर मजाक उडाउँछन् । 'कम्तीमा म प्रधानमन्त्री र नेकपा (एमाले)को अध्यक्ष रहुञ्जेल अहिले चर्चामा ल्याइएजस्तो नेपालमा बंगलादेश वा श्रीलंकाजस्तो जस्ता घटना हुने स्थिति हुँदैन,' पूर्व प्रधानमन्त्री डा. बाबुराम भट्टराईसँगको भेटमा शुक्रबार ओलीले भनेका थिए ।

संसद्मा प्रचण्डले आवेगपूर्ण ढंगले बंगलादेशको घटना नेपालमा दोहोरिन सक्ने बताएका थिए । त्यस्तो आन्दोलनको नेतृत्व प्रचण्डले गर्न नसक्ने भएपनि कुनैपनि बेला जनआक्रोश सडकमा विस्फोट हुनेतर्फ भने सत्ता साझेदार दलकै नेता सशंकित छन् ।

'बलियो सरकार'का हिस्सेदार नेपाली कांग्रेसका कार्यकर्ता मौन छन्, तर एमालेका कार्यकर्ता काठमाडौंका मेयर बालेन साहसँग भिडिरहेका छन् । राम्रो कामको प्रशंसा गर्दै सरकारको प्रतिरक्षामा लाग्नुपर्ने दलका कार्यकर्ताको काम बालेनसँग भिड्नु मै सीमित छ । एउटा स्वतन्त्र मेयर र लोकप्रिय मत पाएको देशको दोस्रो ठूलो दलका कार्यकर्ताबीच भइरहेको वाकयुद्धले जग हँसाइरहेको छ ।

प्रधानमन्त्रीको दोस्रो कार्यकालका बेला ओलीले एउटा अनावश्यक विवाद उप्काए- अयोध्यामा नभई राम चितवनको ठोरी (अयोध्यापुरी)मा जन्मेका हुन् । लामो समयसम्म उनले राम ठोरीमै जन्मिएको दोहोऱ्याइरहे, तर तथ्य स्थापित भएन । बरु नेपालको कालीगण्डकीबाट राम जन्मभूमि अयोध्यासम्म शालिग्राम शिला लगियो- तामझामपूर्ण धार्मिक यात्रासहित ।

तेस्रो कार्यकाल (प्राविधिक रूपले चौथो)को शुरूआतमा ओलीले फेरि नेपाल-भारत प्रबुद्ध समूह (ईपीजी)को प्रतिवेदन बुझ्ने कुरालाई जोडतोडका साथ उठाइरहेका छन् । कमल थापादेखि सूर्यनाथ उपाध्यायको किताब विमोचन गर्दासम्म ओलीले ईपीजी प्रतिवेदन बुझ्ने कुरालाई निकै महत्त्व दिएर उठान गरिरहेका छन् । ओली पहिलोपटक प्रधानमन्त्री बनेको समयमा दुवै देशका प्रबुद्ध नागरिकको सहभागितामा गठन भएको ईपीजीको प्रतिवेदन ६ वर्षदेखि अलपत्र छ ।

'ठोरी'को रामजस्तै ईपीजीको प्रतिवेदन पनि अलपत्र पर्छ कि ओलीको अडानले भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी प्रतिवेदन बुझ्न तयार हुन्छन्, त्यो समयक्रमले देखाउनेछ । तर, यस्ता कुरामा प्रधानमन्त्री भुल्दा 'समृद्ध नेपाल, सुखी नेपाली'को महत्त्वाकांक्षी नारा अलपत्र पर्ने ओलीले बुझेकै होलान् ।

आन्तरिक राजनीतिमा पनि ओलीका अभिव्यक्ति समस्या समाधान गर्नेभन्दा बढाउनेतर्फ उद्धत देखिन्छन्, जुन उचित छैन । देशको प्रधानमन्त्रीले प्रतिपक्षी दललाई समेत विश्वासमा लिएर हिँड्नुपर्ने हो, तर संसद्मा एमाले र माओवादीबीच 'वार' चलिरहेको छ ।

पछिल्लोपटक एमाले सचिव योगेश भट्टराईले माओवादी सशस्त्र संघर्षलाई 'हिंसा' भनेपछि माओवादीको मुटुमा घोच्यो । माओवादी सांसदले सशक्त प्रतिवाद गरे । त्यो विवाद मत्थर हुन लागेको थियो, ओलीले लोली मिलाउँदै हिंसा नै भएको बताएर यसलाई लम्ब्याएका छन्

'हाम्रो देशमा हिंसा थियो, त्यसलाई व्यवस्थापन गर्नुपऱ्यो, केही मानिसहरूले महिमामण्डन गरेको सुन्छु, त्यस्तो महान् थियो भने किन छोडेको त्यो बाटो ? किन आउनुपऱ्यो शान्ति प्रक्रियामा ? त्यस्तो महान जनयुद्ध नै थियो भने त सफल पार्नुपर्थ्यो, जनयुद्ध हो भने त्यो फेल हुँदैन,' ओलीले भदौ २२ गते शनिबार कर्मचारीको कार्यक्रममा भनेका थिए ।

बंगलादेश-श्रीलंकाको घटना निम्त्याउने काम सरकार र प्रतिपक्षमा बसेका दुवैले गरिरहेका छन् । जनआक्रोशको पारो बढाउन दुवैले समान योगदान दिइरहेका छन् । प्रचण्डप्रति ओलीको कटाक्ष र आक्रोश पार्टी बैठकमा पनि देखियो । १९ गतेको पोलिटब्युरो बैठकमा ओलीले प्रचण्डलाई 'राउन्ड किक हानेको' विम्ब प्रयोग गरे ।

प्रत्युत्तरमा प्रचण्डले शुक्रवार ओलीलाई जवाफ फर्काए- ' प्रधानमन्त्रीको कुर्सीमा बसेका नेताले प्रचण्डलाई राउन्ड किक हानेको भनेर बोलेको सुनें । अब जनताको राउन्ड किक कस्तो हुन्छ, तिनले देख्नेछन् ।'

उनीहरू साँच्चिकै देश र जनताप्रति चिन्तित भएको भए सरकारको नेतृत्वमा रहेको नेता र विपक्षमा रहेको नेताबीच प्रतिस्पर्धा हुनुपर्छ । तर देशमा रहेका दलका नेताहरु भने सत्तामा रहँदा देशमा सबै सही भएको देख्ने अनि सत्ताबाट बाहिरिएपछि देशमा समस्या नै समस्या भएको देख्ने प्रवृद्धिकै कारण पनि सत्तामा रहेका र सत्ता बाहिर रहेका नेताहरु प्रति आम जनसमुदायको विश्वास घट्दै गइरहेको छ । यसैको कारण पनि नेताहरु प्रति जनतामा आक्रोसको स्थिति देखिएको हो ।

त्यस्तै संसदमा अहिले पुनः उपसभामुखको विषयलाई लिएर सत्ता साझेदार दल नैतिकताको प्रश्न उठाउँदै राजीनामा गर्न माग गर्दै दुई तिहाईको दम्भ देखाएर पदच्यूट गर्ने तयारीमा लागेको देखिएको छ । जसको विरोधमा संसदमा विपक्षमा रहेका दलहरु उपसभामुखको बचाउमा देखिएको छ । यसरी सत्तामा हुँदा नैतिकता नदेख्ने अनि सत्तामा बाहिरिए पनि नैतिकताको प्रश्न तेर्साएर चलखेल गर्ने प्रबृतिका कारण नेपालको राजनीतिले आम जनतामा मात्र होइन अन्तराष्ट्रिय जगतमा समेत देशको छबीमा धक्का लाग्ने गरेको छ । जुन देशको अस्थिर राजनीतिको निरन्तरताको कारण पनि बनेको हो ।

तर नेपाली आम जनता र देशको बर्तमान अवस्थामा त्यसको बलियो विकल्प पाउन नसक्नु पनि नेताहरुमा देखिएको दम्भ हो । यही दम्भ अहिले नेपाली राजनीतिमा हाबी छ ।

## मातृभाषाका...

कार्यक्रमको आयोजना गरी विभिन्न मातृभाषामा प्रकाशित पत्रपत्रिकाहरूलाई सम्मानित गरेको छ । सम्मानित हुने पत्रिकाहरूमा तान्छोप्पा मासिक (लिम्बू), बुङ्वाफा (बान्तावा राई), गुगुल्डि (डोट्याली), तामाङ डाजाङ (तामाङ), थौकन्ह ( नेपाल भाषा), बज्जिकाञ्चल दैनिक (बज्जिका), भोजपुरी टाइम्स (भोजपुरी), रचना (नेपाली), सितिमि (चाम्लिङ राई), लिब्जु-भुब्जु (वाम्बुले) र लावा डगर (थारु) रहेका छन् । प्रमुख अतिथि संस्कृति तथा नागरिक उड्डयन मन्त्री बद्रीप्रसाद पाण्डेले सम्मानित पत्रिकाका प्रधान सम्पादक, सम्पादक, प्रतिनिधिहरूलाई सम्मानपत्र प्रदान गरेको थियो । कार्यक्रममा प्रमुख अतिथि मन्त्री पाण्डे सहित भाषा आयोगका संस्थापक अध्यक्ष लवदेव अवस्थी, नेपाल प्रज्ञा प्रतिष्ठानका कुलपति भूपाल राई, भाषा आयोगका सदस्य, अमर गिरी, गोपाल जी प्रसाद सर्राफ (गोपाल अश्क), डा.पुष्करराज भट्ट, डा.उषा हमाल, आयोगका सल्लाहकार डा.रामावतार यादव, रचना द्वैमासिक पत्रिकाका प्रधान सम्पादक रोचक घिमिरेलगायतले मन्तव्य राखेको थियो । उक्त अवसरमा भाषा आयोगका का.मु.सचिव डा. लोकबहादुर लोप्चनले 'भाषा आयोगको संवैधानिक दायित्व र उपलब्धिहरू'बारे आफ्नो प्रस्तुति दिएको थियो । सोही अवसरको दोस्रो सत्रको कार्यक्रममा विभिन्न प्रदेश भित्र बोलिने भाषाका प्रतिनिधिहरूले आफ्नो प्रदेश र स्थानभित्रका विभिन्न भाषाहरूका अवस्थाहरूबारे चर्चा गरेको थियो । कार्यक्रम भाषा आयोगका अध्यक्ष डा.गोपाल ठाकुरको सभापतित्वमा सम्पन्न भएको थियो ।

## य:सिं गुँबाट......

भद्रकाली पुऱ्याएको हो ।

य:सिंको लागि रुख छनोट गरी काट्न नेपाली सेनाको श्री शार्दूल जंग गुल्मका गुल्मपतिको नेतृत्वको गुर्जुको पल्टन, हनुमानढोका दरवारका पुजारी ब्राम्हण, केन्द्रीय मानन्धर संघको पदाधिकारीलगायतको टोली बिहिवार साँझ ७ बजे चित्तपोलस्थित य:सिं गुँ पुगेको केन्द्रीय मानन्धर संघका सचिव एवम् सञ्चारकर्मी केके मानन्धरले बताउनुभयो ।

टोलीले परम्परागत विधि विधान अनुसार पुजा गरी यसवर्षको य:सिंका लागि रुख छनोट गरिएको मानन्धरले बताउनुभयो । उहाँका अनुसार बिहिवार राती करिव साढे ८ बजे रुख काटिएको थियो । रूख काट्नु अघि गुरूजुको पल्टनले सलामी दिएको थियो ।

यो वर्ष भक्तपुरस्थित साःक्वलान टोलको नमोबुद्ध बचत समूहले पूजाको लागि आवश्यक हुने क्वतः, कलश, सुकुन्दा लगायतको पूजाथाली केन्द्रीय मानन्धर संघलाई हस्तान्तरण गरेको थियो । नेपाल पञ्चाङ्ग निर्णायक विकास समितिले संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय सिंहदरबार तथा त्रिपुरेश्वरस्थित गुठी संस्थानलाई ईन्द्रजात्रा सम्बन्धि विभिन्न सांस्कृतिक गतिविधिहरुको शुभसाइत उल्लेख गरी पठाइएको पत्र बमोजिम जिम्मेवारी प्राप्त निकाय केन्द्रीय मानन्धर संघले य:सिंको लागि वृक्षकर्तन गरेको हो । रूख काटिएसँगै पाँच जनाको गुरूजुको पल्टनले एकैपटक बन्दुक पड्काएर हर्ष बढाइँ दिएको हो ।

यो वर्ष भदौ ३० गते आइतवार बिहान ८:२६ बजे ईन्द्र ध्वजोत्थान हुनेछ, ईन्द्रजात्रा अर्थात यँयाःको क्वहनेयाः कुमारी यात्रा असोज १ गते मंगलबार हुँदैछ ।

ईन्द्रजात्रालाई काठमाण्डौं, ललितपुर, भक्तपुर, धुलिखेल, दोलखालगायतको ठाउँमा वर्षा र सहकालका देवता ईन्द्रको पूजा-आराधना गरी परम्परागत तरिकाले मनाउँदै आएको छ ।

पछिल्लो समय भारतको सिक्किम, अमेरिका, जापान, अष्ट्रेलिया, बेलायतमा समेत ईन्द्रजात्रा मनाउँछन् । १२औंदेखि १८औं शताब्दीमा निर्माण भएका मन्दिरहरुले भरिएको हनुमानढोका दरबार यो जात्राको उद्गम स्थल हो ।

भाद्र शुक्लपक्ष अर्थात् यँलाथ्व द्वादशीको दिन ईन्द्रध्वजोत्थान गरी सुरु हुने ईन्द्रजात्रा चौथी अर्थात् ईन्द्रध्वज पतनसम्म ८ दिन हुन्छ । यो अवधिमा विभिन्न नाच, कुमारी, भैरव, गणेशको

## नेवा:.....

गरिएको थियो । नेवाः समुदायको बारेमा वृहद जानकारी यस ज्ञानकोष 'नेवाः म्हसीका', 'संस्कृति व सम्पदा', 'भाषा, लिपि व साहित्य', 'म्ये, बाजं र प्याखं' व 'सिल्प, प्रविधि व ज्ञान' गरी पाँचभागमा प्रकाशन भएको छ । जसमध्ये 'नेवाः म्हसीका'को विमोचन जनकवि दुर्गालाल श्रेष्ठ, 'भाषा, संस्कृति व सम्पदा'को विमोचन संस्कृतिविद वज्राचार्य, 'भाषा, लिपि व साहित्य'को साहित्यकार चित्रकार, 'म्ये बाजं व प्याखं'को वरिष्ठ संगीतकर्मी श्रीगोपाल प्रजापति र 'सिल्प, प्रविधि व ज्ञान' क्रोधकला शिरोमणि कुम्हाः ले गरेको थियो ।

कार्यक्रममा बोल्दै ज्ञानकोषका परिकल्पनाकार एवम् नेपालभाषा एकेडेमिका भाइस चान्सलर मल्ल के सुन्दरले पुस्तकको बारेमा बोल्दै पुस्तक केवल नेपालभाषामा लेखिएको शब्दहरुको बाढी मात्र नभइ नेवाः समुदायलाई वृहत ढंगले परिचित गराउने पुस्तक भएको बताए । पुस्तक नेवाः समुदायको उत्पत्तिदेखि संस्कृति, जात्रा पर्व लिपि, साहित्यलगायत समग्र क्षेत्रको बारेमा ज्ञान दिने पुस्तक भएकोले विमोचित पुस्तक केवल पुस्तक मात्र नभइ नेवाः समुदायको आत्मा भएको बताए ।

जनकवि दुर्गालाल श्रेष्ठ र काठमाडौं महानगरपालिका संस्कृति तथा पर्यटन विभागका संयोजक एवम् काठमाडौं महानगरपालिका ८ वडाका अध्यक्ष आशामान संगतले शुभकामना मन्तव्य दिएको कार्यक्रममा सभापतित्व गरेकी महानगरपालिकाका उपमेयर सुनिता डंगोलले यस्तो महत्वपूर्ण पुस्तक प्रकाशनमा महानगरपालिकाको तर्फबाट सहकार्य गर्न पाउँदा आफूलाई खुशी लागेको बताए । उनले यस पुस्तकलाई नेपाली र अंग्रेजी दुबै भाषामा प्रकाशन गर्न महानगरले सहयोग गर्ने प्रतिबद्धता पनि व्यक्त गरिन् ।

पाँच भागमा प्रकाशित पाँचवटा पुस्तकमा २ हजार ८ सय पृष्ठ रहेको छ । ज्ञानकोशको 'नेवाः म्हसीका'को संयोजन शाक्य सुरेन, 'संस्कृति व सम्पदा'को संयोजन डा. चुन्दा वज्राचार्य, 'भाषा, लिपि व साहित्य'को संयोजन प्रा. प्रेमशान्ति तुलाधर, 'म्ये, बाजं व प्याखं'को संयोजन त्रिरत्न मानन्धर र 'शिल्प, प्रविज्ञि व ज्ञान'को संयोजन विश्व शाक्यले गरेको हो । विमोचन कार्यक्रममा पुस्तक प्रकाशनको निम्ति सहयोग गर्ने सबैलाई एकेडेमीका सदस्य सचिव पुष्पराज राजकर्णिकारले धन्यवाद ज्ञापन गरेको थियो ।

## नेवार.... .

अदुवा झिक्ने प्रचलन समेत रहेको छ ।

लोककथन अनुसार परापूर्वकालमा स्वर्गमा देवसभा भईरहेको समयमा चन्द्रमाले गणेशलाई हात्तीको टाउको र मुख भएको भनी ठूलो हेला र अपमान गर्दछ । सो सहन नसकी गणेशले चन्द्रमालाई तिम्रो अनुहार हेर्नेलाई चोर दोष लाग्नेछ भन्ने श्राप दिएछ । सोही श्रापका कारण चन्द्रमालाई हेर्ने र उसँग कुराकानी गर्ने कोही भएन । चन्द्रमाको ठूलो बेईज्जत हुन थाल्यो । अन्तःमा चन्द्रमाले पछुतो मानी गणेशको श्रापबाट मुक्ति पाउने अनेक उपाय सोच्न थाले । त्यसैक्रममा भगवान शिवको शरणमा चन्द्रमा पुग्यो ।

भगवान शिवले भाद्र शुक्ल चतुर्थीको दिन दुवो, लड्डु र मुलासहित गणेशको विशेष पुजा आराधना गरे श्रापबाट मुक्ति पाउन सक्ने उपाय बताएपछि चन्द्रमाले सोही अनुसार गणेशको सेवा गर्दछ । गणेशले खुसी भएर चन्द्रमालाई गणेश चतुर्थीको दिनमात्र चन्द्रमालाई हेऱ्यो भने चोर दोष लाग्ने अन्य दिन नलाग्ने वरदान दिए । सोही अनुसार चथाः मनाउने क्रममा अहिले पनि समाजमा चोर दोष लाग्ने डरले घरका ढोकाहरु बन्द गरी लुकिरहेन चलन कायम छ ।

चथाः पर्वले कुनै पनि व्यक्तिको रुपरङ्ग नभई उसको बानी र व्यवहारका रुपमा असल खराव छुट्याउनु पर्ने सन्देश दिन खोजिएको संस्कृतिविद् प्रा. डा. पुरुषोत्तमलोचन श्रेष्ठको कथन छ ।

# दसैमा व्यापार महोत्सव २०८१

भक्तपुर । भक्तपुर जिल्लाको कृषि, घरेलु, हस्तकला तथा परम्परागत ला, संस्कृति, पर्यटन, व्यापार प्रवर्द्धनको निम्ति भक्तपुर साँस्कृतिक, पर्यटन तथा व्यापार महोत्सव २०८१ हुने भएको छ । मेला नेपालीहरुको महान पर्व शुभविजय दशमीको पावन अवसरमा भक्तपुर चेम्बर अफ कमर्सको आयोजना र सगुन इभेन्टको व्यवस्थापनमा हुन लागेको हो ।

मेनेजमेण्ट प्रा.लि. को व्यवस्थापनमा भक्तपुर नगरपालिका वडा नं १ सल्लाघारीस्थित खुल्ला मैदानमा २०८१ आश्विन ९ गतेदेखि १९ गते तवानुसार सन् २०२४ को सेप्टेम्बर २५ देखि अक्टोबर ५ सम्म (११ विवसीय) हुन लागेको हो । त्यस अनुसार भक्तपुर साँस्कृतिक, पर्यटन तथा व्यापार महोत्सव २०८१ आयोजना गर्ने तयारी गरेको सोमबार आयोजित पत्रकार सम्मेलन गरी जनाइयो ।

भक्तपुर जिल्लामा रहेका धार्मिक, ऐतिहाँसिक तथा पर्यटकीय महत्वका स्थानहरुको राष्ट्रिय एवं अन्तर्राष्ट्रियस्तरमा पहिचान दिलाउदै यहाँका स्थानीय उत्पादनहरु लगायत राष्ट्रिय अन्तर्राष्ट्रियस्तरका उत्पादनहरुको बजारीकरणमा विशेष टेवा पुऱ्याउने उद्देश्यले महोत्सवको रहेको जनाएको छ ।

पत्रकार सम्मेलनका आयोजक भक्तपुर चेम्वरका अध्यक्ष कविदास श्रेष्ठले भक्तपुर जिल्ला ऐतिहासिक, साँस्कृतिक, धार्मिक एवं पर्यटकिय स्थानहरुले भरिभराउ क्षेत्र भएको शिक्षा, स्वास्थ्य, यातायात र व्यवस्थित बस्ती विकासमा भक्तपुर जिल्ला क्रमश अगाडि बढदै गरेको बताए । यस जिल्ला राजधानी उपत्यकाको एक प्रमुख व्यवसायिक केन्द्रको रुपमा विकसित भएको छ, उनले सम्मेलनमा भने । यस अर्थमा यस क्षेत्रका उत्पादनहरुको बजारीकरण र यहाँको व्यवसायिक सम्भावनाहरुको उजागर गर्नमा महोत्सवले महत्वपूर्ण भूमिका निर्वाह गर्ने विश्वास रहेको छ, उनले भने ।

दशैको मुखमा आयोजना हुने यस महोत्सवमा दैनिक उपभोग्य सामानहरु सस्तो सुलभ रुपमा उपलब्ध हुनुका साथै नयाँ स्किमका उत्पादनहरुमा छुटको समेत व्यवस्था हुने जनाइएको छ । महोत्सवमा मौलिक उत्पादन तथा हस्तकला, कृषि उत्पादनहरु, विउविजन तया मलखाद, कृषि औजार, प्रविधि तथा यन्त्र, जडिबुटी तथा औषधी, छालाका सामानहरु, गारमेन्ट तथा जुत्ताचप्पल, गलैचा तथा पश्मिना, सूचना प्रविधि, इलेक्ट्रिकल्स् तथा इलेक्ट्रोनिक्स, फर्निचर तथा फर्निसिंग, पर्यटन तथा शैक्षिक संस्था, घरजग्गा तया निर्माण सामाग्री, बैंक तथा वित्तिय संस्था, अटोमोवाइल्स् लगायत रोजगार बाता निकायका गरी १५० भन्दा बढी स्टलहरु रहने छन् ।

११ दिनको उक्त महोत्सवमा एक लाख रुपैयादेखि १८,५०० सम्म स्टल भाडा हुने जनाइयो । महोत्सव अवधिभर करिब दुईलाख पचास हजार दर्शकहरुले अवलोकन गर्ने र उक्त अवधिमा करिब १० कारोड रुपैया बराबरको कारोवार हुने अनुमान रहेको छ ।

महोत्सव प्रवेशका लागि सर्वसाधारणलाई रु. ७० र विद्यार्थीहरुलाई रु. ५० को टिकट लाग्ने जनाइएको छ । वृद्धवृद्धा तथा शारिरीक असक्षम

इमेल: thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

## "कार्साङ्" को फर्स्ट्लुक पोस्टर सार्वजनिक




काठमाडौं । छायांकन सकेर सम्पादनको टेबुलमा रहेको चलचित्र 'कार्साङ्'को फर्स्ट्लुक पोस्टर सार्वजनिक भएको छ । निर्माण टिमले पोस्टरसँगै रिलिज डेट पनि अनाउन्स गरेको छ । यो चलचित्र पुस २६ गते रिलिज हुनेछ ।

सार्वजनिक गरिएको पोस्टरमा चलचित्रका दुई मुख्य पात्र छन् । दयाहाङ राई र सिर्जना निङलेखु छन् । दयाहाङ सुरुवाल मात्र लगाएर उभिएका छन् । हिलो लागेको सुरुवालले उनी कसैसँग भर्खरै झगडा गरेको देखिन्छ । बदलाको भावमा रहको उनको रिसाहा अनुवारले उनी कसैलाई केही भन्दैछन् जस्तो लाग्छ ।

छेउमा उनको श्रीमतीको भूमिकामा रहेकी सिर्जना छिन् । उनी रोइरहेकी छन् । आँगनमा ग्यालिन लडेको छ । बिर्को खोलिएको ग्यालिनबाट भर्खरै केही पोखिएको छ । दया र सिर्जनाको भावभंगी र आगनमा पोखिएको तरल पदार्थ हेर्दा त्यो रक्सी हो भन्ने आंकलन लगाउन सकिन्छ । छेउमा तीन चुली ढुंगा लगाएर बालिएको आगोले उनीहरुले रक्सी पार्ने गरेको थप संकेत गर्छ ।

प्रहरीले अथवा सिनेमा दुई दशक अगाडिको माओवादी द्वन्द्वको समय हो भने तत्कालीन माओवादी कार्यकर्ताले रक्सी पोखिदिए । सोही क्रममा दयाहाङको झगडा उनीहसँग पर्यो । यसले उनीहरुको जिविको पार्जनको माध्यम नै रक्सी बनाएर स्थानीय बजारमा बेच्नु हो भन्ने बुझिन्छ ।

पृष्ठभूमीमा दुईवटा घर छन् । माथिल्लो लेक वा हिमाली बस्ती हो भन्ने यी घर र पात्रको पहिरनले बताएको छ । घरको माथिल्लो भागमा बाँसमा झुण्डाएको केही झुता मकैले उनीहरूको कमजोर आर्थिक अवस्था संकेत गर्छ ।

माथिल्लो लेक वा हिमाली बस्तीमा दुःख गरेर बस्ने एक परिवारको कथा भन्ने संकेत यो पोस्टरले गरेको छ । पोस्टरले दयाहाङले यो चलचित्रमा गज्जवको गाउँले क्यारेक्टर निभाएको अनुमान लगाउन सकिन्छ ।

यम शेर्पा निर्देशित चलचित्रको अघिल्लो हप्ता मात्रै छायांकन सकिएको थियो । सिन्धुपाल्चोक जिल्लाको बाह्रबिसे नगरपालिका, भोटेकोसी गाउँपालिका क्षेत्रमा खिचिएको छ ।

यार्सा फिल्म्स र पुरुषोत्तम प्रधान फिल्म्सको प्रस्तुतिमा सिनेमा निर्माण गरिएको हो । सामाजिक कथावस्तुमा निर्माण भएको चलचित्रमा निर्देशक शेर्पा स्वयंको पटकथा र संवाद छ । चलचित्रमा दयाहाङ र सिर्जनासँगै जितु नेपाल, दीया मास्के, बुद्धि तामाङ, प्रेम लोप्चन, डोमा ह्योल्मो, सृष्टि गौतम, छोकी शेर्पा, सुरवीर पण्डित र कर्मा शेर्पाको अभिनय छ ।

बाल कलाकारमा राशि लिम्बू र सोहन थापाले अभिनय गर्दैछन् । सिनेमालाई पुरुषोत्तम प्रधानले खिचेका हुन् । उनी सिनेमाका निर्माता समेत हुन् । गोविन्द बोहरा सह-निर्माता रहेको सिनेमाका कार्यकारी निर्माता आङछिरिङ शेर्पा, लाइन प्रोड्युसर वीरेन्द्र शाही हुन् ।

मनोज थापा मगर, बरिष्ठ सेलो गायक एवम् संगीतकार विश्व दोङ संगीत रहने सिनेमाको मुख्य सहायक निर्देशकमा सुदीप कुँवर, अभि लामाको कोरियोग्राफी, दिलीप पन्त प्रोडक्शन म्यानेजर हुन् ।

## समुन्द्रबाट आउने खतराको सामना




काठमाडौं । तपाईंलाई एक्सन फिल्ममा रुचि छ भने 'देवरा'को ट्रेलर रोचक लाग्न सक्छ। जुनियर एनटीआर, जान्हवी कपुर र सैफ अली खान स्टारर दक्षिण भारतीय फिल्मको पहिलो भागको ट्रेलर सार्वजनिक भएको छ । भीएफएक्सको अधिकतम प्रयोग गरिएको फिल्मको ट्रेलरमा सैफअली खानको एक्सन-प्याक लुक प्रस्तुत छ । फिल्ममा सैफ भैराको भूमिकामा छन् । जुनियर एनटीआरले फिल्ममा बाबुछोराको दोहोरो भूमिका निर्वाह गरेका छन् । ट्रेलरमा समुन्द्री किनारमा बसोबास गर्ने एक शक्तिशाली र निडर पात्र देवराको कथा पेश गरिएको छ जो आफ्ना मान्छेका लागि समुन्द्रबाट आउन लागेको सम्भावित खतराको सामना गर्छ।

यससँगै कथाको स्पिन-अफ देखाइएको छ, जसमा देवराका छोरा वरदाको प्रवेश हुन्छ । वरदा ठ्याक्कै आफ्नो बुबा देवराजस्तै देखिन्छन्, यद्यपि उनको बुबाभन्दा फरक । उनी कोमल स्वभावका छन् । यस्तो अवस्थामा उनले बुबाको विरासत कसरी सम्हाल्छन् भन्ने कुरा ट्रेलरमा देखाइएको छ ।

जान्हवी कपुरले फिल्ममा वरदाको प्रेमी थंगमको भूमिका निर्वाह गरेकी छन् । यद्यपि उनलाई ट्रेलरमा कम समय दिइएको छ । ट्रेलरमा सैफअली खान भैराको भूमिकामा छन्, यद्यपि उनी देवरासँग हुन् वा उनको विरुद्धमा भन्ने सस्पेन्स भने कायमै छ ।

## अपर्णा प्रधानको ३ पुस्तक एकैसाथ विमोचन




समालोचक अपर्णा प्रधानका तीन वटा पुस्तकलाई एउटै मञ्चबाट एकैचोटी विमोचन गरिएको छ । नेपालभाषाको लघुकथा संकलन 'खुसि अःखतं न्ह्याइ', निबन्ध संकलन 'सुकुन्दा' तथा समालोचना संकलन 'नेपालभाषाया बाखं विधाय् बाखंमि यज्ञरत्न धाख्वाः' नामक पुस्तक विमोचन गरिएको हो । काठमाडौंको टेकुमा विमोचन भएको पुस्तक समेत गरेर प्रधानले नेपालभाषा, नेपाली र अंग्रेजी भाषामा रचना गर्नुभएको पुस्तकको संख्या ३७ वटा पुगेको छ । ती मध्ये ३४ वटा मौलिक, दुई वटा नेपाली भाषामा अनुवाद गरिएका आत्मकथा र एउटा अंग्रेजी भाषाको आत्मकथा छन् ।

कार्यक्रममा काठमाडौं महानगरपालिकाकी उपप्रमुख सुनीता डंगोलले साहित्य श्रीवृद्धि गर्ने क्षेत्रमा असाधारण योगदान दिएकी समालोचक प्रधान र ३३ वर्षदेखि साहित्यिक पत्रिका प्रकाशन गर्दै आएको कुतः पिकाकको प्रशंसा गरेकी छन् । 'एउटै किताब निकाल्नु पनि सजिलो विषय होइन । किताबको लागि लेख, रचना तयार गरेर अन्य थुप्रै काम गर्नुपर्ने हुन्छ । तर समालोचक अपर्णा प्रधानले ३७ वटा किताब तयार गर्नुभयो ।' उपप्रमुख डंगोलले बताइन् । हुनपनि केही वर्षको अन्तरालमा दुई भन्दा बढी संख्यामा किताब तयार गरेर एउटै मञ्चबाट विमोचन गराउने साहित्यकारको छवि प्रधानले बनाएकी छन् ।

त्यस्तै, आख्यानकार मथुरा सायि्मले नेपालभाषाको साहित्य क्षेत्र व्यावसायिक हुन नसकेकोप्रति चिन्ता व्यक्त गरे । स्रस्टाको रचनालाई कदर गर्न र साहित्यकारलाई प्रोत्साहन गर्न पुस्तक किनेर पढ्नुपर्नेमा उहाँले जोड दिए । ३७ वटा किताब रचना गरेर साहित्य क्षेत्रमा असाधारण योगदान गरेकी समालोचक अपर्णा प्रधानलाई राष्ट्रियस्तरको सम्मान दिनुपर्ने सायि्मको भनाइ थियो ।

कार्यक्रममा नेपालभाषा एकेडेमीका चान्सलर यज्ञरत्न धाख्वाः, महासचिव डा. पुष्पराज राजकर्णिकार, समाजसेवी कृष्णलाल प्रधान, निबन्धकार पूर्ण ताम्राकार, विमल ताम्राकार, सुलोचना मानन्धर, जलेश्वरी श्रेष्ठ, पद्मावती सिंह, हितकरवीर कंसाकार, छत्र बहादुर कायस्थ, घनश्याम राजकर्णिकार, प्रवीण जोशी लगायतको सहभागिता थियो ।









प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ अङ्क १० ने.सं. ११४४ असोज ०२ गते बुधबार, २०८१ 18 Sept. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## खोला किनारको विवादमा सर्वोच्चमा पुनरावलोकन निवेदन



काठमाडौं । उपत्यकामा रहेका खोला किनाराका सम्बन्धमा केही समय अगाडि सर्वोच्च अदालतले गरेको फैसलामा पुनरावलोकन गर्न प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयले निवेदन दर्ता गराएको छ । सर्वोच्च अदालतका न्यायाधीशद्वय आनन्दमोहन भट्टराई र विनोद शर्माको संयुक्त इजलासले २०८० पुस ३ गते गरेको फैसलामा खोला किनारबाट २० मिटर छोड्नुपर्ने र नदी किनारका सरकारी जग्गा अतिक्रमण गरी बनाइएका बस्ती हटाउन भनिएको थियो ।

प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयका तर्फबाट सचिव फणीन्द्र गौतमले महान्यायाधिवक्ताको कार्यालयमार्फत दर्ता गराइएको उक्त निवेदनमा संवैधानिक, कानुनी र व्यवहारिक समस्या सिर्जना हुने तथ्यहरू जानकारी हुन आएकाले उक्त फैसला कार्यान्वयन गर्न नसकिने प्रकृतिको हुँदा पुनरावलोकन निवेदन दर्ता गरिएको उल्लेख छ ।

'नदी-खोला किनारामा के कति तटीय क्षेत्र छोड्ने भन्ने विषय नितान्त कार्यपालिकाको कार्यक्षेत्रभित्र पर्ने विषय हो,

बाँकी पेज ७ मा

## जिब्रो छेडेर थिमिदेखि पशुपतिसम्म परिक्रमा गरिने




काठमाडौं । यँया पुन्हीको भोलीपल्ट अर्थात् आज बुधबार मध्यपुरथिमि नगरपालिका-५ दिगुटोलस्थित दिगु भैरब मन्दिरको अगाडि रहेको दबलीमा जिब्रो छेड्ने जात्रा अर्थात् म्ये प्वाःखनेगु जात्रा हुने भएको छ । मध्यपुर थिमिका विरेन्द्र गजु श्रेष्ठले तेस्रो पटक जिब्रो छेडाएर मध्यपुर थिमिदेखि पशुपतिनाथ मन्दिरसम्म परिक्रमा गरिने भएको छ । हजारौं स्थानीयको उपस्थितिमा बेलुका घाम अस्ताएपछि ४० किलो वजनको 'महादीप' (म्ये) काँधमा बोकेर मध्यपुरथिमिदेखि पशुपतिनाथ मन्दिरसम्म र त्यहाँबाट पुनः मध्यपुरथिमिको नगदेश हुँदै बालकुमारी मन्दिर परिसरमा पुगेर जात्रा समापन हुने छ ।

मध्यपुरथिमि नगरपालिकाका प्रमुख सुरेन्द्र श्रेष्ठले मध्यपुरथिमिको सांस्कृतिक महत्वको यो जात्रालाई सहज रुपमा सम्पन्न गर्न नगरवासी, सुरक्षा निकायका साथै अन्य

बाँकी पेज ७ मा

## सल्लाघारीको जग्गा ख्वप विश्वविद्यालयको लागि माग



भक्तपुर । भक्तपुर नगरपालिका वडा नं. १ सल्लाघारीस्थित १०८ रोपनी जग्गा ख्वप विश्वविद्यालय स्थापनाको लागि प्रयोग गर्नेगरी उपलब्ध गराउन माग गरिएको छ । नेपाल मजदुर किसान

बाँकी पेज ७ मा

## व्यवसायी सर्वसाधारणलाई लुट्दै, अनुगमनमा छैन् सरोकारवालाको ध्यान !

अनुसा थापा

व्यवसायीले लुट्दै सर्वसाधारण, अनुगमनमा छैन् सरोकारवालाको ध्यान !

काठमाडौं उपत्यकाभित्र या बाहिर रहेका अधिकांश खाजाघर, होटल-रेष्टुरेण्ट मापदण्डविपरीत सञ्चालित छ । सरकारको नीतिनियम नटेरीकन सञ्चालनमा आएका त्यस्ता व्यवसायले सरसफाइलाई ध्यान दिएका छन् । खाजाघरहरुले बासी खाना, खाजा बेचेको गुनासो पछिल्लो समय व्यापक सुनिन्छ । त्यसैगरी, बाहिर होटल र भित्र यौनधन्दा चलाउने काम पनि भइरहेको छ ।

होटलहरुले व्यापक बालश्रम गराइरहेका छन् । ससाना बालबालिका होटलको सरसफाइ, भाडा माँझ्न राखिएको देखिन्छ । मिठाइ पसलहरुको हालत पनि उस्तै छ । सडेका, गलेका सामान बेच्न खान्छन् । महँगो पैसा लिएर स्वास्थ्यलाई हानिकारक हुने खाद्यान्न खुलेआम बेचिरहेका छन् । तर, त्यस्ता होटल व्यवसायीलाई कारबाही गर्नमा सरकारको ध्यान छैन् । देशमा तीन तहको सरकार छ यद्यपि, तीनै तहको सरकारले अनुगमन गर्दैन् ।

आर्थिक अवस्था कमजोर भएका महिलाहरुलाई होटल सञ्चालकले यौन पेशामा लगाउने गरेका छन् । त्यस्ता होटल सञ्चालकहरु पक्राउ परेको भनि कहिलेकाँही समाचार प्रकाशित भइरहेको हुन्छ । तर, अनुगमन प्रभावकारी भएन् ।

बाँकी पेज २ मा

**व्यवसायी......**

उपत्यकाभित्रको अधिकांश होटलमा त्यस्तो धन्दा चलेको होला । सरकारले त सबै होटलमा अनुगमन गर्नुपर्यो, निगरानी राख्नुपर्यो ।

गलत कामको गरिबीले फाइदा उठाउन भएन् । खाजाघरहरु निकै दुर्गन्धित छन् । फोहोरै फोहार । कहिले सफा नगर्याझैं देखिन्छ । खाना पकाउने ठाउं च्यापच्याप हुन्छ । भाडा माझ्ने ठाउँ पनि त्यस्तै । खाना पनि कतिदिन बासी हुन्छ । खसी भनेर बोकाको मासु पकाएर बेच्छन् । राँगा भनेर भैंसी । लोकल रक्सी भनेर स्वास्थ्य सिद्ध्याउने पदार्थ बेचिन्छ । त्यो रक्सीमा के-के हाल्या हुन्छन् खोइ ?

सबैभन्दा धेरै फोहोर त मिठाइ पसल हुन्छ । मिठाइ पसलको किचन र मिठाइ बनाउने व्यक्ति देख्यो भने सायदै कसैले मिठाइ खाला । किचन त फोहोर हुन्छ । साथै, मिठाइ बनाउने व्यक्ति पनि । सरसफाइलाई रद्दीभर पनि ध्यान दिएको पाइँदैन् । मासु बेच्ने पसलहरु पनि उत्तिकै दुर्गन्धित हुन्छ । छेउमा गएर उभिनसमेत महामुश्किल छ । मरेका, गलेका, कुहिएका मासु बेच्छन् ।

सर्वसाधारणहरु सरकारले अनुगमन ठप्प पारेको गुनासो गर्छन् । किराना पसल होस् या सुपरमार्केट त्यहाँ अनुगमन छैन् । जसका कारण व्यापारीलाई व्यापक फाइदा भएको छ । म्याद गुज्रिएको सामानमा नयाा म्याद हालेर बेच्ने कार्य जारी नै छ । कम तौल, गुणस्तरहीन सामान बेचेर उपभोक्ता लुटिरहेका छन् । अधिकांश पसलको दर्ता छैन् । राज्यलाई कर तिर्दैनन् ।

तैपनि सर्वसाधारणलाई दिँउसै अध्याँरो पारेर ठगिरहेका छन् । जनप्रतिनिधि र सरकारी कर्मचारीलाई पैसाभन्दा ठूलो केही भएन् । मापदण्डविपरीत पाइएमा कमिशन लिन पुग्छन्, कारबाहीमा चासो छैन् । मुलुकको प्रधानमन्त्री केपी शर्मा ओलीलाई देश र जनताको अवस्थाबारे केही थाहा छैन् । आफ्नो विरोधमा जो आउँछ, उसलाई सिद्ध्याउनतर्फ मात्र उनी ध्याउन्न छन् ।

हाउडे भाषण ठोक्छन् । हालै उनले आफ्नो विरोधमा बोल्ने जनप्रतिनिधिलाई ठाउँमा ल्याउन आफ्ना कार्यकर्तालाई निर्देशन दिएका छन् । हुन त एमालेका नेता-कार्यकर्ताले ओलीलाई पहिलेदेखि नै 'गुण्डा' भन्थे । उनले त्यो प्रमाणित गरिदिएका छन् । देशको प्रधानमन्त्रीले उनले बोल्ने शब्द बोल्दैनन् । प्रधानमन्त्रीको कुर्सीमा बसेर हामी २०८४ को मिशनमा छौं भनिरहेका छन् । अहिले नै पदमा भएकालाई के ८४ मिशन ? काम गर्ने भए अहिले गरेर देखाए भइगो । जनता अल्मलाउन ८४ भनिरहनै पर्दैन् । अहिले केही नगरेको व्यक्तिले ८४ मा गर्छ ? अब जनताले काँग्रेस र एमालेलाई भोट दिनैहुन्न । यस्ताले अलिअलि बाँकी बचेको देश पनि सकाइदिन्छन् । दशौंपछि ठूलो आन्दोलन हुने देखिन्छ । के थाहा ८४ सम्म यिनीहरु देशमा रहने हुन् कि हैनन् ?

जनतालाई भाषण हैन्, काम गर्ने व्यक्तिको खाँचो परेको छ । विकृति-विसङ्गति, भ्रष्टाचार, महँगी, अनियमितताबाट निकाल्ने नेतृत्व चाहिएको छ । दशौं आइसक्यो । अब तीन साता मात्र बाँकी छ । तर, बजार अनुगमनमा सरोकारवालालाई चासो छैन् । प्रधानमन्त्री ओली बजार अनुगमन गर्न सरोकारवालालाई निर्देशन दिँदैनन् । हुन त बेफुर्सद भएर पनि होला । काठमाडौं महानगरका मेयर बालेन साहको विरोध गर्दै उनलाई भ्याइनभ्याइ छ ।

अनि के निर्देशन दिन्थें ? व्यापारीले सयको सामान पाँच सयमा बेचेर ठगिरहेका छन् । हरेक सामानको मिसावट छ । मँहगो मूल्य तिरेर विषादीयुक्त सामान खान बाध्य छन् सर्वसाधारण । पानीमा समेत केमिकल मिसाइएको पाइन्छ । जमिनमूनिको पानी केमिकल मिसाएर बजार पठाइएको छ । जहाँ पनि उपभोक्ता लुटिएका छन् । सर्वसाधारणले पैसा तिरेर रोग निम्त्याइरहेका छन् ।

तर, प्रधानमन्त्रीलाई मतलब छैन् । होस् पनि किन ? उनी दिनहुँ हजारौं रुपैयाँको पानी पिउँछन् । त्यो पनि कुन देशको हो ? मरे सर्वसाधारण मर्ने त हो भन्ने सोच अहिलेको सरकारमा देखिन्छ । दुई ठूला दल मिलेर बनेको सरकार असफल देखिसकेको छ । केही काम गर्न सकेको छैन् अहिलेको सरकारले । अब जनताको घरमा कसरी भोट माग्न जान्छ ? अनि जनताले यिनीहरुलाई के आधारमा भोट दिन्छन् ?

ओली र कांग्रेस सभापति शेरबहादुर देउवालाई कसलाई राजदूत बनाउने ? कसलाई सरुवा बढुवा गर्ने ? कहाँबाट कमिशन उठाउने ? ठेक्कापट्टा कुनचाँहि निर्माण व्यवसायीलाई दिने ? बस् यति मात्र ध्यान छ । माओवादी अध्यक्ष प्रचण्ड पनि काँचुलीभन्दा छिटो रंग फेर्छन् । उनको नौटंकी सबैले बुझेका छन् । हिजो दाउरा सुरुवाल लगाउने प्रचण्ड आज झुत्रो सर्ट लगाएर हिँड्छन् । हुन त जनतालाई देखाउनुपर्यो ।

प्रचण्डसँग ओली र देउवाको विरोध गर्ने आँट छैन् । उनीहरु देख्नेबित्तिकै सर्ल्याकसुर्लुक परिहाल्छन् । समाजवादीका अध्यक्ष माधव नेपाल अचानक नेता बनेका हुन् । बैंकका कर्मचारी उनमा नेता हुने क्षमता पनि देखिँदैन् । हुन त बैंकका कर्मचारीलाई कसरी नाफा खाने र घुस लिने भन्ने मात्र हुन्छ । जनताको नारा लगाएर पदमा आयो अनि उनीहरुलाई नै दुःख दियो ।

अब प्रधानमन्त्रीले कि म जनताको अभिभावक होइन् भन्नुपर्यो कि अनुगमन गर्न निर्देशन दिनुपर्यो । सर्वसाधारण मर्कामा परेका छन् । सरकारलाई मतलबै छैन् । व्यापारीले उपभोक्ता ठग्ने, राजनीतिक दलले व्यापारीबाट चन्दा उठाएर पार्टी चलाउने । व्यापारीले जतिसुकै ठगेपनि सरकारले किन अनुगमन गर्दैन् ? यो प्रष्टै छ । चन्दा उठाएको छ अनि हात बाँधिपर्यो, मुखमा बुझो लगाउनैपर्यो ।

धनीलाई यहाँ सँधै दशैं हो । तर, गरिबलाई त वर्षदिनमा आउने चाड हो । त्यतिबेला पनि राम्रो सामान पाउँदैनन् । त्यही कुहिएको, सडेको, गलेको सामान खान बाध्य हुन्छन्, उपभोक्ता । यसअघि पनि ओली पटकपटक प्रधानमन्त्री बनिसके । यद्यपि, सिन्को भाँच्नेन् । काँग्रेस र एमालेले विगतदेखि राज्यको ढुकुटी दोहन गर्दै आएको छ । त्योबाहेक अरु केही अपेक्षा नगरेपनि हुन्छ ।

सरकारले अहिलेसम्म अग्रिम टिकट बुकिङ खोल्न चासो देखाएको छैन् । तीन साता मात्र बाँकी हुँदा त सरकारले छलफल गरेको छैन् भने कहिले गर्छ ? अब त गुड्ने र उड्ने दुवैको ठगीभन्दा चल्छ । पाँच सयको बाटोमा तीन हजार तिर्न बाध्य हुन्छन्, सर्वसाधारण । सरकार केही गर्दैन् । सरकारले गैरजिम्मेवारीपनका कारण यो वर्षपनि धेरैले ज्यान गुमाउनुपर्ने देखिन्छ ।

किन कि जिल्ला जाने सबै गाडी थोत्रा, पुराना हुन्छन् । त्यसमा पनि कोचाकोच गरेर यात्रु हालिन्छ । अनि सवारी दुर्घटना हुने भैगो । जनता आशे भए । त्यसैले कुनै फेरबदल भएन् । ओलीसँग काम क्षमता छैन् भन्ने स्पष्ट हुँदाहुँदै पनि यस्तालाई चुनिएर पठाइन्छ ।

## रुसी सैनिकको संख्या बढाउँदै पुटिन !

एजेन्सी । रूस-युक्रेन युद्धको बीचमा, भ्लादिमिर पुटिन र जेलेन्स्की बीचको वास्तविक तनाव बढ्दै गएको छ । पुटिनले हालै रुसी सेनाको लागि यस्तो आदेश जारी गरेका छन्, जसले युक्रेनमा मात्र नभई अमेरिकालगायत नेटो देशहरूमा पनि त्रास फैलाउनेछ । रुसी राष्ट्रपति पुटिनले फेरि आफ्नो सैन्य शक्ति बढाउने भएका छन् । उनले रुसी सेनाको संख्या बढाउन आदेश दिएका छन् । रुसी सेनामा १ लाख ८० हजार नयाँ सैनिक भर्ती गरिने भएको छ । यससँगै रुसी सेनामा सक्रिय सैनिकको संख्या १५ लाख पुग्नेछ । १ लाख ८० हजार सैनिक बढाएपछि रुसको सेना १५ लाख सक्रिय सैनिकको संख्यामा चीनपछि दोस्रो ठूलो हुनेछ । युक्रेनसँगको युद्धपछि पुटिनले सन् २०२२ पछि सेनाको आकार बढाएको यो तेस्रो पटक हो ।

क्रेमलिनको आदेश अनुसार यो वृद्धिपछि रुसी सेनाको कुल संख्या २४ लाख हुनेछ । पुटिनले रुसी सशस्त्र सेनाको कुल संख्या २३ लाख ८० हजार पुर्याउने आदेश दिएका छन् । यसमा १५ लाख सक्रिय सैनिक रहनेछन् । रूसी सेनामा भर्ना हुने यी नयाँ युवा कर्मचारीहरू डिसेम्बरदेखि आफ्नो कर्तव्य पूरा गर्न तयार हुनेछन् । अहिले सक्रिय सैनिकको मामिलामा रुसभन्दा चीन मात्र अगाडि छ । रुसले अमेरिकालाई पनि पछि पारेको छ । चीनमा करिब २० लाख सक्रिय सैनिक छन् । उही समयमा भारतमा करिब १४ लाख सक्रिय सैन्य कर्मचारी छन् ।

पुटिनले फेब्रुअरी २०२२ मा युक्रेनमा आक्रमण गरेपछि तेस्रो पटक आफ्नो सेना विस्तार गर्दैछन् । पुटिनको यो नयाँ आदेश जेलेन्स्कीका लागि ठूलो तनावभन्दा कम छैन । अमेरिकालगायत नाटो राष्ट्रहरुले रुसलाई एक्लो पार्ने र पुटिनलाई तोड्ने प्रयास गरिरहेका छन् । तर झुक्नुको सट्टा पुटिनले आफ्नो शक्ति बढाइरहेका छन् । जेलेन्स्कीले युक्रेन युद्धमा युद्धविराम चाहेको भए पनि पुटिनको मनसाय यति छिट्टै युद्ध अन्त्य हुन दिने जस्तो देखिँदैन । यद्यपि, पुटिन आफ्नै शर्तमा युद्धविराम चाहन्छन् । सेनाको संख्या बढाउनुको उद्देश्य यो पनि हुन सक्छ कि उनीहरु युद्धलाई लम्ब्याउन चाहन्छन् ।

युक्रेनी सेना रुसको कुर्स्क क्षेत्रमा प्रवेश गरेकोले पुटिनको यो आदेश पनि महत्वपूर्ण छ । गत महिना पनि, युक्रेनले कुर्स्क क्षेत्रमा सीमा पारबाट बिजुलीको द्रुत आक्रमण सुरु गर्यो । दोस्रो विश्वयुद्धपछि रुसी भूभागमा यो पहिलो विदेशी आक्रमण थियो । यही कारणले अहिले पुटिन रिसले रातो भएका छन् र उनले युक्रेनविरूद्ध कडा आलोचना गरिरहेका छन् । गत हप्ता, रसियाले कुर्स्कबाट युक्रेनी सेनालाई निष्कासन गर्ने प्रयासलाई तीव्र पारेको छ र पूर्वी डोनबास क्षेत्रको प्रमुख युक्रेनी सहर पोक्रोभस्कतर्फ अगाडि बढिरहेको छ । २०२२ पछि, पुटिनले लडाकू सेनाको संख्या दुई पटक विस्तार गर्न आदेश दिए ।

अगस्ट २०२२ मा पुटिनले १,३७,००० सेना बढाउन आदेश दिएका थिए । जसका कारण रुसी सेनामा सैनिकको संख्या २० लाखभन्दा अलि बढेको छ । यसमा ११.५ लाख सक्रिय सैनिकहरू थिए । त्यसपछि डिसेम्बरमा, भ्लादिमिर पुटिनले १७०,००० सेनाको अर्को आधिकारिक विस्तारको आदेश दिए, कुल १.४३ मिलियनमा ल्याए । अब जेलेन्स्की पुटिनको यो कदमबाट अचम्भित छन् । सक्रिय सैनिकको संख्याका कारण अमेरिका पनि कम तनावमा हुनेछैन ।

## अमेरिकी कमाण्डोले लादेनको शवसँगै पाकिस्तानबाट अर्को वस्तु पनि ल्याएका थिए !

एजेन्सी । मे २, २०११ मा, अमेरिकी नौसेना कमाण्डो लडाकुहरूले संसारको सबैभन्दा खतरनाक आतंकवादी ओसामा बिन लादेनलाई मारेका थिए । अमेरिकी गुप्तचर एजेन्सीहरूले ९/११ पछि लादेनलाई खोजिरहेका थिए र उनीसम्म पुग्न करिब दस वर्ष लाग्यो । मे २ को त्यो रात, जब अमेरिकी कमाण्डोहरू पाकिस्तानको एबोटाबादमा लादेनको घरमा प्रवेश गरे, उनको शवसँगै उनीहरूले त्यहाँबाट अर्को चीज ल्याए, जुन संसारको सबैभन्दा गोप्य कुरा घोषित गरिएको थियो । त्यो चीज लादेनको कम्प्युटरको हार्ड ड्राइभ थियो, जसमा उसको सबै गोप्य दस्तावेजहरु थिए ।

**कति हार्ड ड्राइभ फेला पर्यो?**

ओसामा लुकेर बसेको अबोटाबादको कम्पाउण्डबाट युएस नेवी कमाण्डो लडाकुले ५ वटा कम्प्युटर, १०० भन्दा बढी फ्ल्यास ड्राइभ, सयौं डीभिडी डिस्क, धेरै मोबाइल फोन र एउटा हस्तलिखित डायरी फेला पारेका थिए । केही महिनापछि अमेरिकी गुप्तचर एजेन्सी सीआईएले ओसामा बिन लादेनको हार्ड ड्राइभबाट प्राप्त केही जानकारीलाई सार्वजनिक गरेको थियो । लादेनको हार्ड ड्राइभमा २५० गिगाबाइटभन्दा बढी डाटा थियो र प्रत्येक फाइल स्क्यान गर्नु निकै जटिल कार्य थियो । ३ महिनाको अनुसन्धान पछि, गुप्तचर एजेन्सीहरूले प्रत्येक फाइलला गणना गरे र ती हार्ड ड्राइभहरूमा ४८०,००० भन्दा बढी दस्तावेजहरू रहेको जनाएका थिए ।

**लादेनको हार्ड ड्राइभमा के भेटियो ?**

ओसामा बिन लादेनको हार्ड ड्राइभमा सयौं तस्विरहरू, प्रचार भिडियोहरू र विभिन्न पश्चिमी भिडियोहरू र जापानी एनिमेसन कार्टुनहरू फेला परेका थिए । नेशनल ज्योग्राफिकको रिपोर्ट अनुसार हार्ड ड्राइभमा धेरै पोर्न र नग्न भिडियोहरू पनि भेटिएको जनाएको छ । लादेनको हार्ड ड्राइभबाट उनको बारेमा धेरै व्यक्तिगत कुराहरू र अल कायदाका धेरै रहस्यहरू बाहिर आए । यस हार्ड ड्राइभबाट, एजेन्सीहरूले पत्ता लगाए कि कम्तिमा २० जना लादेनसँग उनको एबटाबादको घरमा बसिरहेका थिए ।

**यसरी पत्ता लाग्यो ओसामाको छोरा**

यी हार्ड ड्राइभले आफूलाई संसारबाट सधैं लुकाएर बस्ने ओसामा बिन लादेनको घरमा भिडियो क्यामेरा रहेको खुलासा गरेको छ । एक युवकले यो क्यामेरा चलाउने गर्थे । हार्ड ड्राइभमा उनको अनुहार नदेखिए पनि हातमा घडी बाँधिएको थियो । खुफिया एजेन्सीहरूले दिएको जानकारी अनुसार सो व्यक्ति ओसामा बिन लादेनका छोरा खालिद बिन लादेन थियो, जो त्यतिबेला १८ देखि २० वर्षको थिए । ओसामाको हार्ड ड्राइभमा भेटिएको तस्बिरमध्ये एउटा सीएनएन पत्रकार पिटर बर्गनको थियो । उनले सन् १९९७ मा अफगानिस्तानमा ओसामा बिन लादेनसँग अन्तर्वार्ता लिएका थिए र यो तस्विर त्यतिबेला खिचिएको थियो ।

**तरकारी फलाउने, कुखुरा पाल्ने र खुवाउँछन्**

ओसामा बिन लादेनको ड्राइभबाट भेटिएका भिडियोहरूमध्ये उनको निजी कोठाको भिडियो पनि थियो । उनको कोठामा सिंगल बेड र टिभी थियो । यस बाहेक त्यो परिसरमा एउटा बगैंचा पनि थियो, जसमा फलफूल र तरकारीहरू उब्जाइन्थ्यो । भिडियोमा कद्दू जस्ता तरकारीहरू देखिन्छन् । ओसामाको भाषणका धेरै भिडियोहरू पनि भेटिएका छन् । ओसामा बिन लादेनको हार्ड ड्राइभबाट भेटिएका कागजात र भिडियोहरूमा अनुसन्धान गरिरहेका सीएनएन पत्रकार पिटर बर्गनले लादेनको हार्ड ड्राइभमा भेटिएको सामग्रीले उनी एबटाबादमा निकै सामान्य जीवन बिताइरहेको देखाएको बताएका छन् । पुराना गाउँले जस्तै । उनले आफ्नो वास्तविक परिचय कसैलाई थाहा नहोस् भनेर हरसम्भव प्रयास गरे ।

ओसामा बिन लादेन र उनका अंगरक्षकहरूले आफ्नो एबोटाबादको घरलाई सावधानीपूर्वक बलियो बनाएका थिए । घर वरिपरि कम्तिमा १० फिट अग्लो चारैतिर पर्खाल बनाइएको थियो । त्यसमा काँडे तार जडान गरिएको थियो । लादेन र उसको परिवारका सबै सदस्यहरू यस काँडेतारको पर्खालभित्र बस्थे । केटाकेटी न स्कूल जान्छन् न बजार । कसैलाई पनि भेट्दैनन् । उसले आफ्नै तरकारी खेती गर्थो, कुखुरा पाल्थ्यो र गाई पनि पालेको थियो । घरबाट निस्किएको फोहोर पनि कम्पाउण्डमै जलाइएको थियो ।

# बालकुमारी साकोसद्वारा साताव्यापी कार्यक्रम गरी रजत महोत्सव

भक्तपुर । बालकुमारी बचत तथा ऋण सहकारी संस्था लि.ले साताव्यापी कार्यक्रम आयोजना गरी २५ औं स्थापना दिवस तथा रजत महोत्सव मनाएको छ । साकोसले भक्तपुर जिल्लाव्यापी चित्रकला प्रतियोगिता, रक्तदान कार्यक्रम, वित्तीय साक्षरता कार्यक्रम, सरसफाई कार्यक्रम, बृद्धाश्रम तथा बौद्धिक अपांगता भएका विद्यार्थीहरुका लागि आवश्यक बस्तेहरुको सहयोग र मध्यपुर थिमिको बालकुमारी मन्दिर परिसरबाट बाहाखाबजार नगदेशसम्म प्रभातफेरी कार्यक्रम सम्पन्न गरेको छ । भने संस्थाले साताव्यापी कार्यक्रम अन्तगर्त अन्तिम दिन थिमि बैंक्वेटमा समापन कार्यक्रम गरी सम्पन्न गर्ने कार्यक्रम रहेको संस्थाका सचिव पृथ्वीराम श्रेष्ठले जानकारी दिएको छ ।

कार्यक्रमको पहिलो दिन भदौं २७ गते संस्थामा आवद्ध सदस्यहरुलाई लक्षित गरी वित्तीय साक्षरता कार्यक्रम सम्पन्न गरेको हो । संस्थाका अध्यक्ष तुईलाल श्रेष्ठको अध्यक्षतामा भएको कार्यक्रममा नेफ्स्कूनका सहायक कार्यकारी अधिकृत दुर्गाप्रसाद ढकालले प्रशिक्षण दिएको थियो ।

संस्थाले साताव्यापी कार्यक्रमको पहिलो दिन वित्तीय साक्षरता मार्फत सहकारी के हो र संस्थाप्रति सदस्यको भूमिका के हुन्छ भन्ने विषयमा प्रशिक्षण दिएको जानकारी दिदै ऋण परिचालन र बचत गर्दाको महत्वको विषयमा पनि जानकारी दिइएको थियो । तालिममा २ सय बढी सदस्यको सहभागिता थियो । संस्थाले भक्तपुर जिल्लाव्यापी चित्रकला प्रतियोगिता समेत आयोजना गरेको छ ।

संस्थाले बालकुमारी मन्दिर क्षेत्र र बालबालिकालाई पायक पर्ने अन्य दुई ठाउँमा समेत गरी तीन क्षेत्रमा चित्रकला प्रतियोगिता आयोजना गरेको छ । संस्थाले साताव्यापी कार्यक्रमको तेस्रो दिन खुल्ला रक्तदान शंखधर चोकमा सम्पन्न गरेको छ । जसमा १०२ जनाले रक्तदान गरेको संस्थाका अध्यक्ष तुईलाल श्रेष्ठले जानकारी दिए । सो रक्तदान कार्यक्रममा प्राविधिक सहयोग जिल्ला रक्त संचार केन्द्र भक्तपुरको रहको थियो । चौथो दिन बृद्धाआश्रम तथा मानवविद्या गृहलाई भौतिक सामाग्री सहयोग, पाँचौ दिन सरसफाई कार्यक्रम, छैठौं दिन प्रभातफेरी कार्यक्रम र सातौं दिन रजत महोत्सव समारोह समापन कार्यक्रम तथा सस्थापक पूर्व सञ्चालक र कर्मचारीलाई सम्मान गरी रजत बर्ष कार्यक्रम समापन गर्ने संस्थाले जनाएको छ ।

# भक्तपुरमा भएको मुटु रोग सेवा किन नचलाएको ?

भक्तपुर । भक्तपुरको दूधपाटीस्थित सहिद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्रमा भएको मुटु रोग सेवा सुचारु नगरेको भन्दै शनिबार राति प्रदर्शन गरिएको छ । केन्द्रमा भइरहेको भ्रष्टाचार देख्न नसकेको भन्दै सवैलाई जानकारी दिन बाजागाजासहित भक्तपुर नगर परिक्रमा गरी प्रदर्शन गरिएको थियो ।

नागरिक सरोकार समाजको अगुवाईमा कार्यक्रम भएको थियो । कार्यक्रमअन्तर्गत सुरुमा सहिद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्र दूधपाटी भक्तपुरमा भेला भएको थियो । त्यहाँबाट बाजागाजा बजाएर अगाडि व्यानर राखेर नगर परिक्रमा गरेको थियो । माइकबाट सहिद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्रमा भइरहेको भ्रष्टाचार कहिले देख्ने भन्दै माइकिंग पनि दिंदै गएको थियो । साथै पर्चाहरु पनि वितरण गरिएको थियो ।

वर्षाकावीच पनि सामूहिक प्लाष्टिक ओढेर प्रदशर्न गरेको थियो । ठूलो प्लाष्टिक लिएर ठाउँठाउँमा समाउन मिल्ने बनाइ प्रदर्शनले नगर परिक्रमा गरेको थियो । आयोजकमध्येका एकजना सुरेन्द्र श्रेष्ठले पानी परेकाले भक्तपुर नगर आधा मात्रै परिक्रमा गरेको बताए । साँझ पांच बजेदेखि सुरु भएको प्रदर्शनले आधा नगर परिक्रमा गरेको थियो । वर्षाका कारण आधी नगर मात्रै परिक्रमा गरेको र भविष्यमा फेरि पनि यस्तो प्रदर्शन जारी राख्ने उनले बताए ।

प्रदर्शनमा सहभागी रामबाबु राईले यस विषयमा स्वास्थ्य मन्त्रीलाई पनि ज्ञापनपत्र दिन जाने कार्यक्रम रहेको जानकारी गराए । स्वास्थ्यमन्त्री प्रदीप पौडेललाई भेटेर समस्या अवगत गराउने योजना रहेको उनले सुनाए ।

सहिद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्रका मुटु, फोक्सो तथा नशा विभागका प्रमुख डा. सञ्जित शाह (हाल विभागीय कारवाहीमा रहेका) ले केन्द्रका कार्यकारी निर्देशक डा. पुकारचन्द्र श्रेष्ठलाई हटाए मात्रै त्यहाँको भ्रष्टाचार रोक्न सकिने बताए । डा. पुकारको संकीर्ण सोचका कारण मुटु सेवा हुँदाहुँदै पनि सेवाग्राही सुविधाविहीन भएको भन्दै करोडौं होइन, अर्बौंका सामान कुहाएर भ्रष्टाचार गरेको आरोप उनले लगाए ।

अस्पतालमा मिर्गौला, कलेजो, मुटु, फोक्सो तथा नशाको मुख्य सेवा भए पनि अहिले सुविधा मिर्गौला र कलेजोको मात्रै भएको प्रदर्शनकारीहरुले जनाए । यही कारण धेरै भक्तपुरवासी हृदयघातबाट अकालमा ज्यान गुमाउन बाध्य भइरहेको उनीहरुले सुनाए । यही कारण यसलाई मृर्गौला अस्पताल भनेर जनमानसमा प्रचलित छ ।

मृत्युपछि मानिसका आठवटा अंग प्रत्यारोपण गर्न सकिने तर यहाँ मिर्गौला र कलेजको मात्रै प्रत्यारोपण भइरहेको चिकित्सकहरु बताउँछन् । केन्द्र सञ्चालनमा आएको १२ वर्षमा औंलामा गन्न सकिने मानिसले मात्रै केन्द्रमा मुटुको सेवा पाएको बताइएको छ ।



# बदाम, ओखरलाई भिजाएर खाँदा शरीरमा बल मिल्छ !

एजेन्सी । प्रायः मानिसहरु बदाम, किसमिस, खजूर र अन्य धेरै ड्राइ फ्रुट्सलाई रातभर भिजाएर प्रयोग गर्छन् । तर, धेरै मानिसले ओखरलाई सिधै खान्छन् । ओखर भिजाउनु पर्दैन भन्ने मानिसहरूलाई लाग्छ, तर त्यस्तो होइन । स्वास्थ्य विज्ञहरूका अनुसार जसरी बदामलगायत अन्य सुख्खा फलफूल भिजाएर खाँदा फाइदा हुन्छ, त्यसैगरी ओखरलाई रातभर पानीमा भिजाएर राख्नु आवश्यक हुन्छ । यदि तपाईले यसो गर्नुभएन भने तपाईको स्वास्थ्यलाई यसको पूर्ण लाभ मिल्दैन ।

डाइट मन्त्र क्लिनिक, नोएडाकी वरिष्ठ आहारविज्ञ कामिनी सिन्हाका अनुसार स्वस्थ रहन सबैले ओखर भिजाएर खानुपर्ने बताउँछिन् । ओखरलाई रातभर पानीमा भिजाएर राख्नाले ओखर सजिलै पचिन्छ र यसको पोषक तत्वहरूको अवशोषण बढ्छ । काँचो ओखर खाँदा पाचन सम्बन्धी समस्या हुन सक्छ, किनभने ओखरमा फाइटिक एसिडलगायत धेरै तत्वहरू हुन्छन्, जुन सजिलै पच्दैनन् । ओखरलाई भिजाएर राखेमा यी तत्वको प्रभाव कम हुन्छ र सजिलै पचाउन सकिन्छ । भिजाएर ओखर खाँदा ग्यासको समस्याबाट राहत मिल्छ ।

ओखर भिजाएर त्यसमा रहेको फङ्गस, ब्याक्टेरिया र अन्य प्रदूषकहरू हट्ने डाइटिशियन कामिनीले बताइन् । यसले कुनै पनि प्रकारको समस्याको जोखिमलाई हटाउन सक्छ । जसरी बदाम र अन्य ड्राइ फ्रुटलाई रातभर भिजाएर बिहान खाने गर्छ, त्यसैगरी ओखरलाई भिजाएर खानु बढी फाइदाजनक मानिन्छ । दैनिक ४-५ वटा अखरोट खानु स्वास्थ्यका लागि फाइदाजनक हुन्छ, किनभने ओखरमा पोषक तत्वको ठूलो भण्डार हुन्छ । त्यहाँ धेरै प्रकारका ओखरहरू छन् र सबै प्रकारका ओखरहरू पोषणयुक्त हुन्छन् ।

भिजाएर खानुका ५ ठूला फाइदाहरुः भिजेको ओखर मुटुको स्वास्थ्यका लागि निकै फाइदाजनक मानिन्छ, किनभने यसमा ओमेगा-३ फ्याटी एसिड र एन्टिअक्सिडेन्ट राम्रो मात्रामा पाइन्छ । यी पोषक तत्वहरूले मुटुको धमनी सफा गर्छ र रक्तचाप नियन्त्रण गर्छ । भिजेको ओखर खाँदा मुटु रोगको जोखिम कम हुन्छ ।

- पाचन प्रणालीलाई बलियो बनाउन भिजाएर ओखर खानुपर्छ । ओखरमा फाइबर धेरै हुन्छ, जसले पाचन प्रणालीलाई स्वस्थ राख्न मद्दत गर्छ । फाइबरले पेटको समस्यालाई हटाउन मद्दत गर्छ र कब्जियतबाट राहत दिन्छ । ओखरले आन्द्राको स्वास्थ्य सुधार्न पनि फाइदाजनक हुन्छ । - मस्तिष्क शक्ति बढाउन भिजाएको ओखरको सेवन गर्नुपर्छ । ओखरमा ओमेगा-३ फ्याटी एसिड र एन्टीअक्सिडेन्ट हुन्छ, जसले मस्तिष्कको कार्य क्षमता बढाउन सक्छ । यी पोषकहरूले मस्तिष्क कोशिकाहरूलाई स्वस्थ राख्छन् र स्मरणशक्ति सुधार गर्न सक्छन् । स्मरणशक्ति बढाउनका लागि दैनिक ओखर खानुहोस् ।

- भिजेको ओखरले छालालाई जवान र स्वस्थ राख्न पनि फाइदाजनक साबित हुन्छ । ओखरमा भिटामिन ई र एन्टिअक्सिडेन्ट हुन्छ, जसले छालालाई पोषण दिन्छ । यी तत्वहरूले छालाको जलन र सूजन कम गर्दछ, जसले छालामा चमक र कोमलता कायम राख्छ । यसमा एन्टी एजिङ गुण हुन्छ ।

- तौल घटाउन खोज्ने मानिसहरूका लागि भिजेको ओखरको सेवन लाभदायक हुन्छ । ओखरमा प्रोटिन र स्वस्थ बोसो प्रशस्त हुन्छ, जसले तपाईंलाई लामो समयसम्म भोक लाग्नबाट बचाउँछ । यसले क्यालोरीको मात्रा घटाउन र तौल नियन्त्रण गर्न मद्दत गर्छ ।

# बालबालिकाका सुरक्षाका लागि दक्षिण कोरियामा डिलिट द चिल्ड्रेन अभियान

काठमाडौं । बालअधिकार समूह 'सेभ द चिल्ड्रेन'ले दक्षिण कोरियामा 'डिलिट द चिल्ड्रेन' अभियान सुरु गरेको छ । एआईबाट सिर्जित अश्लील सामग्रीको संकटबीच बालबालिकाका तस्बिरहरूको अनलाइन सुरक्षा सुनिश्चित गर्न उक्त संस्थाले यो अभियान थालेको हो । बिना अनुमति बालबालिकाका तस्बिरहरू अश्लील डिपफेक सामग्री बनाउन प्रयोग भइरहेको भन्दै दबाब सिर्जना गर्न अभियान सुरु गरेको सेभ द चिल्ड्रेनले जनाएको छ । एक प्रेस विज्ञप्ति जारी गर्दै संस्थाले बालबालिकाको व्यक्तिगत जानकारी अनलाइनबाट हटाउने अधिकारको लागि जनचेतना बढाउने प्रयास गरेको जनाएको छ ।

सेभ द चिल्ड्रेनले गरेको एक सर्वेक्षण अनुसार १० देखि १८ वर्षका ८५.५ प्रतिशत बालबालिकाले आफ्नो व्यक्तिगत जानकारी अनलाइनबाट हटाउन पाउने अधिकारको पक्षमा रहेको बताएका छन् । सर्वेक्षणमा ९८ प्रतिशत बालबालिकाले आफ्नो अनुमति बिना राखिएका तस्बिरहरू हटाउनुपर्छ भन्नेमा मत दिएका छन् ।

दक्षिण कोरियाको निजी सूचना संरक्षण आयोगले गत वर्ष ' इरेजर सेवा' सुरु गरेको थियो, जसले बालबालिकाको व्यक्तिगत जानकारी हटाउन वेबसाइट सञ्चालकहरूलाई अनुरोध गर्न सक्थ्यो । तर, यो सेवा केवल व्यक्तिले आफैंले पोस्ट गरेको जानकारी हटाउन सीमित रहेको छ । सेभ द चिल्ड्रेनले बालबालिका र तिनीहरूका अभिभावकहरूलाई कुनै पनि अनलाइन जानकारी, विशेषगरी डिजिटल रूपमा परिवर्तन गरिएका तस्बिरहरू हटाउन अनुरोध गर्ने अधिकारको माग गर्दै अभियान चलाइरहेको छ ।

अभियानको क्रममा बालबालिकालाई उनीहरूको व्यक्तिगत जानकारी कसरी प्रयोग हुन्छ भन्ने बारेमा निर्णय लिने अधिकार दिन सरकारलाई आग्रह गरिएको छ ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### पुनरवलोकनको बहानामा हस्तक्षेप नहोस् !

उपत्यकामा रहेका नदी तथा खोला किनाराको मापदण्डसम्बन्धी सर्वोच्च अदालतको फैसलाको पुनरवलोकन गर्न सरकारले निवेदन दिने निर्णय गरेको छ। सरोकारवालाहरूले पुनरवलोकनका लागि सरकारलाई दबाब दिएका पछि सरकारले उक्त कदम चालेको हो।

यतिसम्म स्वाभाविक र सही नै हो। तर, न्यायिक पुनरवलोकनका बहानामा भएको प्रचारवाजी र क्रियाकलापबाट भने विधिको शासन कुण्ठित बनाइने लक्षण देखिन थालेको छ । सत्तारुढ दल नेकपा (एमाले)का स्थानीय नेताहरूले सर्वोच्च अदालतको फैसलाविरुद्ध ‘राजनीतिक दलका नेताहरूकहाँ घरदैलो गरेका थिए। यसरी पुनरवलोकन गर्ने कार्य अदालतबाट नभएर राजनीतिक दलको निर्णयबाट हुनेजस्तो देखिएको छ।

साथै मापदण्डपीडितहरूका प्रतिनिधिका रूपमा प्रकट भएका अभियन्ताहरूले फैसला गर्ने न्यायाधीशमाथि नै महाभियोगसमेत लगाउन मागसमेत गरेका छन्। यस प्रकारको घटना नेपालमा हुँदा पनि देशको प्रधानमन्त्री जस्तो गरिमामय पदमा रहेको व्यक्तिलेसमेत त्यस्तो मागमा कुनै आपत्ति जनाएनन्।

लोकतन्त्रमा न्यायपालिका स्वतन्त्रता र निष्पक्ष हुन्छ। जसको आफ्नै संबैधानिक अधिकार संविधानले नै निर्धारण गरेको हुन्छ। यसरी न्यायपालिका स्वतन्त्र निकाय हुने भएकैले न्यायपालिकालाई जनताले विश्वास गर्छन्। यसैलाई विधिको शासन भन्ने र मान्ने गरिन्छ । तर यहाँ न्यायापालिकाको कुनै निर्णयले दलहरुको स्वार्थमा कुठाराघात हुनासाथ न्यायापालिका माथिनै औंला उडाउने परिपाटी राजनीतिक दलहरुबाटै शुरु हुने गरेको छ। सत्ता प्राप्त हुँदा न्यायापालिका गलत र सत्ता बाहिर हुँदा सही मान्ने प्रवृति राजनीतिक दलमा हाबी हुँदै गएको विगतको घटनाक्रमले पनि पुष्टी गरेको छ।

अदालत स्वतन्त्र र निष्पक्ष हुने ठानेर नै जनताले कानुनको पालना तथा कार्यान्वयन हुने विश्वास गरेका हुन्छन् । राज्य बन्दुकका बलमा होइन जनताको विश्वासमा टिकेको हुन्छ।

न्यायिक पुनरवलोकन सामान्य कानुनी प्रक्रिया हो। तर, त्यसका लागि अहिले जसरी राजनीतिक ‘प्रचारवाजी’मा उत्रनु भने न्यायिक निर्णयमा हस्तक्षेप गरेर लोकतन्त्रको मर्ममा प्रहार गर्ने कुलक्षण हो। हुनत न्यायालयलाई समेत कार्यकर्ता भर्तीकेन्द्र बनाउन नहिचकिचाउने अहिलेका राजनीतिक दलका नेताहरूले नदीको किनारसम्बन्धी मापदण्डको फैसलालाई न्यायपालिकालाई तर्साउने मौका ठानेका हुनसक्छन्। तर, न्यायमूर्तिहरू त्यति लाचार नहोलान् !

सरकारले नदी किनाराको मापदण्डसम्बन्धी फैसलाको न्यायिक पुनरवलोकनमा जाने निर्णय गरिसकेको छ। अब यस विषयलाई सस्तो राजनीतिक प्रचारको विषय बनाएर अदालतको मर्यादामा प्रहार गर्न बन्द गरियोस्। न्यायिक निरुपणका लागि निश्चित् विधि र प्रक्रिया निर्धारित गरिएको हुन्छ। सरकारले विधिवत् निवेदन दिएमा सर्वोच्च अदालतले पनि उचित न्यायिक विवेचना गर्ने नै छ।

# चाडपर्वमा किन बढी हुन्छ सवारी दुर्घटना ?

● विपिन गौतम

वर्षायाम सकिने समय आयो । यस वर्ष प्राकृतिक प्रकोपबाट नेपाल, भारत, चीन, भियतनामलगायत देशका सडकमा विभिन्न समस्या देखिएका समाचार आए।

नेपालका सडक बर्सेनि बाढीपहिरोका कारण लथालिङ्ग अवस्थामा पुग्छन्। सबै चाडपर्व वर्षायामपश्चात शुरू हुने हुँदा प्रायः सडकका कारण दुर्घटना बढी हुन्छ।

नेपालीको लामो बिदा भनेको बडादशैं बिदा नै हो। प्रायः मानिस लामो छुट्टीको पर्खाइमा बसेका हुन्छन्। करिब आधाजसो जनसंख्या काठमाडौंबाट आफ्नो घरगाउँ फर्किन्छन्।

अहिले टिकट कसरी पाउने पहिलो समस्या रहेको छ भने सवारी साधन कस्तो पर्छ भन्ने पनि समस्या एवं चिन्ताको विषय रहेको छ।

एकसाथ छोटो समयमा ३० लाखको हाराहारीमा यात्रु व्यवस्थापन गर्नुपर्ने हुँदा सवारी व्यवस्थापनमा पनि समस्या नै हुन्छ। सवारी साधन र सवारी चालकलाई तयार गरेर फुर्सद नदिइकन यात्रु ओसारपसार गरिनाले विभिन्न सवारी समस्या निम्तिने गरेको सहजै अनुमान लगाउन सकिन्छ।

लामो दुरीका सवारीको अग्रिम टिकट खुला हुने बेला पनि भयो। यात्रा गर्ने यात्रीले चाहेको सवारीसाधन पाउन पनि कठिनाइ हुन्छ। कुन बस कुन दिन पठाउने अहिले नै तय गरिहाल्न यातायात व्यवसायीलाई पनि कठिन नै हुन्छ।

गत वर्ष बसपार्कमा सवारी साधनको अवस्था बारेमा यातायात व्यवस्था कार्यालयबाट खटिएका प्राविधिकले चेकजाँच गरेको जानकारीमा आएको थियो।

सबैजसो सवारीसाधन यसबेला यात्री बोक्न आउने र यात्रीको चाप पनि बढी नै हुने हुनाले जसरी भए पनि यात्री लिएर गइहालोस् भन्ने सोचाइ प्रायः सबै पक्षमा देखिन्छ।

सडकमा सवारी साधन बिग्रने, मोटरपार्टस लिन नजिकका ठूला शहरमा पुगी मेकानिक्स समेत लिई आउनुपर्ने समस्या छ। यी समस्याको समाधानका लागि सरकारी पक्ष र यातायात व्यवसायी समेतले सडकमै मर्मत गर्न सक्ने गरी Road side assistance vehicle, Tow van, Crane and Operator हरू उपलब्ध हुने व्यवस्था मिलाउनुपर्छ।

कुन-कुन सडकमा यातायात सञ्चालनमा के कस्ता सावधानी अपनाउनुपर्छ भन्ने कुरा स्थानीय विपद् व्यवस्थापनसम्बन्धी काम गर्ने निकायले जानकारी गराउन उचित हुनेछ।

सडक कार्यालय, नेपाल प्रहरी र स्थानीय तहको पहलमा सडक सुरक्षित र चाडपर्वको समयमा दुर्घटनारहित आवागमन व्यवस्थापनको काम शुरू गर्न समय आइसकेको छ।

यो वर्ष सडकमा सवारी दुर्घटना न्यूनीकरणका लागि अहिलेदेखि नै पहल शुरू गरौं।

हामी नेपालीको महान पर्व अब सम्मुख आइसकेका बेला सडक दुर्घटनाले कैयौं परिवारलाई क्षति पुऱ्याउने पारिवारिक जीवन नै तहसनहस बनाएको विगतका उदाहरणबाट पाठ सिकेर यसवर्ष सडक दुर्घटनारहित यात्रा बनाउन सबै मिलेर काम गर्नु जरुरी छ।

कसरी सवारी दुर्घटना कम गर्न सकिन्छ ? कस्को जिम्मेवारीमा के-के हुन आवश्यक छ ?

गर्नुपर्ने काम सम्बन्धित पक्ष

क) सवारी साधन मर्मत (सवारी धनी, चालक र मर्मत केन्द्रको दायित्वमा)

ख) २ सवारी चालकको अनिवार्य व्यवस्थापन (सम्बन्धित व्यवसायी, संघ-संस्था, मजदुर संघ-संगठन)

ग) पहाडी तथा ग्रामीण सडकमा टाइम कार्ड (जिल्ला प्रशासन कार्यालय, नेपाल प्रहरी, यातायात व्यवस्था कार्यालय)

घ) जनपद प्रहरीसहित ट्राफिक प्रहरीले धेरै स्थानमा गति मापन (मापसे लापसे) (यातायात व्यवस्था कार्यालय, जिल्ला प्रशासन कार्यालय, नेपाल प्रहरी, स्थानीय अस्पताल)

ङ) सडक मर्मत सम्भारको वास्तविक कार्य (सडक कार्यालय, स्थानीय निकाय)

च) दुर्घटना नहोस्, तर भइहालेमा राजमार्ग नजिकका अस्पतालमा आवश्यक स्रोत साधन र जनशक्तिको व्यवस्था (जिल्ला प्रशासन कार्यालय, जिल्ला जनस्वास्थ्य कार्यालय, स्थानीय निकाय)

छ) क्रेनलगायत तत्काल सडक सुचारु गर्न सक्ने प्रविधिसहितको चालक स्ट्यान्डबाइ (जिल्ला प्रशासन कार्यालय, सडक कार्यालय, नेपाल प्रहरी) (कतिपय चालकहरू चाडपर्वमा आफूखुसी सवारी साधन क्रेन डोजर छोडी गइदिनाले आवश्यक समयमा काम रोकिएको देखिएकाले कडाइका साथ वा भाडा करारमा सोही सवारी साधन चालकहरू थप गर्ने र पालोको व्यवस्था मिलाउन सकिने)

ज) ‘चाडपर्व विशेष सुरक्षा योजना’मा अनिवार्य जिल्ला प्रशासन कार्यालय, सडक कार्यालय, नेपाल प्रहरी, स्थानीय तहका प्रतिनिधि, यातायात व्यवसायी, मजदुर संघ-संगठनका प्रतिनिधि, रेडक्रसका प्रतिनिधि सम्मिलित टोली नै तयार गरेर जिल्ला प्रहरी कार्यालयमा एक समूह कुनै निश्चित समयमा आवश्यकताअनुसार खटाउन वा खटिन सक्ने गरी राख्न सकिएमा दुर्घटनापश्चातको समयमा व्यवस्थापन कार्य सहज हुनेछ।

झ) सडकमा जता पनि टिकट काउन्टर खोल्ने वा दलालमार्फत टिकट किनबेच गर्ने काममा प्रतिबन्ध लगाउनुपर्छ।

ञ) टिकटको दाम देखिनेगरी उल्लेख गरिएको बोर्ड बनाई राख्न लगाउने, यसबाट सर्वसाधारणलाई साधारण बस, डिलक्स बस, एसी र ननएसी बसको भाडा जानकारी हुने भएकाले ठगिन पर्दैन।

ट) हाल नेपालका सबै प्रदेशमा स्थानीय निजी टेलीभिजन कार्यक्रम प्रशारण गरिएका छन्। स्थानीय भाषा समेतमा सडक दुर्घटना न्यूनीकरणका लागि जनचेतनामूलक कार्यक्रम, टिकट दरदाम, सवारी साधनको किसिम आदि प्रशारण गरी जानकारी गराउन सकिन्छ।

ठ) चाडपर्वमा सवारी साधन चालकको कमी हुने भएकाले एउटै चालकले दिन र रात चलाउने हुँदा दुर्घटनाको सम्भावना बढी हुने हुँदा पनि सडकमा चालकको समय देखिने गरी फोटो खिच्ने र अभिलेख राख्ने व्यवस्था हुन आवश्यक छ। सडकमा सामान्य सीसीटीभी निगरानी बढाउन सकिन्छ।

के हामी यात्रा गर्दा डराइरहेका छैनौं ?

अवश्य पनि! घरबाट निस्केपछि, चालकको भरमा पूरै परिवारसहितको यात्रा गर्दा डर लाग्ने धेरै कारणहरू देखा पर्छन्। सवारी चालकले सवारी साधन चलाउँदा गर्ने गलत व्यवहारले यात्रीलाई डर लाग्नु स्वाभाविक हो। जस्तैः

मोबाइल फोनमा कुरा गर्दै

नजिकका यात्रुसँग गफ गर्दै

समय-समयमा मोबाइलबाट गीत परिवर्तन गर्दै

अनावश्यक गतिविधि देखाउँदै सवारी चलाउने (चुरोट, खैनी, पान परागको प्रयोग)

कहिले छिटो चलाउने

स्टेयरिङबाट हात छोडेर जिउ तन्काउने

टाइम कार्ड लागू भएका स्थानमा छिटो कुदाउने अनि रोकेर राख्ने, फेरि दौडाएर लैजाने

यसरी गलत व्यवहार गर्ने चालकविरुद्ध ट्राफिक प्रहरीले कारबाही गर्दा यात्रुलाई पनि जानकारी गराउनुपर्छ, जसले चालक र यात्रुबीच टाइम कार्डको लापरबाहीबारे सजगता फैलाउन सक्छ।

सवारी तथा यातायात व्यवस्था ऐन २०४९ (संशोधनसहित) अनुसार, लामो दुरीमा सवारी चलाउँदा हरेक ४ घण्टामा विश्राम लिनुपर्ने नियम छ, तर चाडपर्वको समयमा यसको पालना हुँदैन।

दफा १०४ अनुसार, लामो दूरीमा अनिवार्य रूपमा २ जना चालक हुनुपर्छ। सम्मानित सर्वोच्च अदालतले पनि २ जना चालक अनिवार्य राख्न आदेश दिएको छ, तर यसको कार्यान्वयन फितलो छ र व्यवसायीहरूले २ चालक राख्न रुचि देखाउँदैनन्। परिचालक पनि कम्तीमा १८ वर्षको उमेरको हुनैपर्छ।

यात्राको क्रममा चालकको अनावश्यक गतिविधिका कारण यात्रु डराइरहेका हुन्छन्। मनमा केही भन्न चाहेर पनि सहन बाध्य हुनुपर्ने अवस्था छ। यस्तो अवस्था सिर्जना हुन नदिन जिम्मेवारी चालकको हुन जरुरी छ। थाकेको चालकबाट सवारी नियन्त्रण कठिन हुन्छ।

जुनसुकै जिल्लामा यात्रा गर्दा चालकको गलत व्यवहार देखियो वा सवारी दुर्घटनाको जोखिम महसुस भयो भने १०० वा १०३ नम्बरमा फोन गरेर स्थानीय प्रहरीलाई जानकारी दिन सकिन्छ। अन्य आवश्यक सम्पर्क नम्बरहरू तल लेखिएका छन्।

नेपालप्रहरीलेजिल्लागतरूपमा सार्वजनिक सूचना आफ्ना फेसबुक पेज, इन्स्टाग्राम, एक्स (ट्विटर) मा उपलब्ध गराउन जरुरी हुन्छ। विभिन्न जिल्लाका प्रहरी कार्यालयहरूको फेसबूक पेजमा सम्पर्क नम्बरहरू राखिएका हुन्छन् । चाडपर्वको समयमा फोटो खिच्नका लागि मोबाइलबाट व्हाट्सएप, म्यासेन्जर प्रयोग गरेर प्रहरीले सजिलै कारबाही गर्न सक्छ।

सचेत यात्रुहरू धेरै छन्, तर चालकको भर पर्नुपर्ने अवस्था छ। चाडपर्वको समयमा पुराना सवारी साधन मर्मत गरेर प्रयोगमा ल्याउँदा दुर्घटनाको सम्भावना बढ्छ, जसको जानकारी केवल साहुलाई हुन्छ। नयाँ चालक राख्दा उनीहरू पनि अन्जान हुन सक्छन्।

यातायात व्यवस्था कार्यालयले चाडपर्वको समयमा सवारी साधनको निरीक्षण गर्न जरुरी छ। अझ चाडपर्वको बेला इजाजतपत्रको पनि आवश्यकता नहुँदा, यसको नियन्त्रण झन् कमजोर हुन्छ। यातायात व्यवस्था कार्यालयका कर्मचारी र ट्राफिक प्रहरीबीच समन्वय गरेर सडकमा रेखदेख गर्नुपर्ने आवश्यकता छ।

सडक सुरक्षा सबैको जिम्मेवारी हो। के अब हामी नेपालको राजमार्गलाई “मृत्यु मार्ग“ भनेर स्वीकार्न तयार छौं? पक्कै पनि होइन। तर, सामान्य लापरबाही, अदक्ष चालक, भौगोलिक जानकारी नहुने चालक, उचित मर्मत नभएका सवारी साधन र नयाँ मार्गहरू दुर्घटनाको प्रमुख कारण बनिरहेका छन्।

२०७६ देखि २०८० सम्म दशैंका सवारी दुर्घटनाको विवरणः

विगतका ५ वर्षमा दशैंको समयमा ६०२ जना आफन्त गुमाएका छौं, यसमध्ये ४३८ जना पुरुष थिए। मुख्य सदस्यको मृत्युले दशैंको उत्सवलाई शोकमा परिणत गरिदिन्छ।

गम्भीर घाइते हुनेहरूको संख्या १७१२ थियो, जसमा ११७१ जना पुरुष थिए।

कुल सवारी दुर्घटना ४६०८ थियो, जसमा साधारण घाइते ५३२८ जना थिए।

दशैंका विभिन्न वर्षहरूमा भएका सवारी दुर्घटनाहरूः

२०७६: ७०० दुर्घटना, १११ मृतक

२०७७: ८५६ दुर्घटना, ११४ मृतक

२०७८: ९६७ दुर्घटना, १७३ मृतक

२०७९: ९३२ दुर्घटना, १०७ मृतक

२०८०: ११५३ दुर्घटना, ९७ मृतक

दशैं २०८१ नजिकै आइरहेको छ। सबै चालकलाई जिम्मेवारीपूर्वक सवारी चलाउन आग्रह गर्दछु। दुर्घटना न्यूनीकरणको पहल हामीले गर्नैपर्छ।

प्रहरी सम्पर्क नम्बरहरूः १००, १०३, १६६००१४१५१६, ९८४९०९११३९ गुनासोका लागिः १११३, ९८५१२९३०००, ०१-५७१९८२१

(लेखक गौतम पूर्व प्रहरी नायव उपरीक्षक हुन्।)

लोकान्तरबाट

# चितिखोलामा "आधा शताब्दी" माथि परिचर्चा सम्पन्न




-जयराम बिडारी

तनहुँ । 'पर्यटनका लागि साहित्य' भन्ने नाराका साथ साहित्यकार लेखकहरुको चितीखोला भ्रमणका क्रममा रामप्रसाद सापकोटाद्वारा लिखित संस्मरणात्मक पुस्तक ' 'आधा शताब्दीमाथि'' विशद परिचर्चा सम्पन गरिएको छ ।

उक्त कार्यक्रमका लेखक, साहित्यकार, तथा पत्रकारहरुको एक दर्जन टोली शुक्रवार भानु नगरपालिका ९ चितीखोला तनहुँस्थित हिमालयन फार्मस्टे पुगेर स्थानीय सांस्कृतिक कार्यक्रममा सरिक भई शनिवार सो कार्यक्रम सम्पन्न गरिएको थियो । कार्यक्रममा प्रमुख अतिथिको रुपमा शिट्लेक गा.पा.अध्यक्ष परशुराम खतिवडाले लेखक साहित्यकारको टोलीलाई स्वागत गरेका थिए । आफू स्वयं पनि पर्यटन क्षेत्रमा क्रियाशील रहेको उल्लेख गर्दै उनले साहित्यकार लेखकहरुका यस्ता भ्रमणले आन्तरिक तथा बाह्य पर्यटन प्रवर्द्धनका लागि कोशे ढुङ्गा सावित हुने विचार व्यक्त गरे ।

सो अवसरमा डा.विन्दु शर्माद्वारा ''आधा शताब्दी'' कृतिमाथि समीक्षा गरिएको थियो । समीक्षाका क्रममा सापकोटाद्वारा लिखित पुस्तकले पर्यटन प्रवर्द्धनका लागि उपयोगी रहने ,आर्थिक समृद्धिको बलियो आधार पर्यटन, हर्क गुरुङ मोडलमा लेखनको इमान्दारिता रहेको, सरल सहज साथै समाजसेवी चरित्रको रुपमा लेखिएको उल्लेख गर्दै कृति सफलताको शुभकामना व्यक्त गरिएको थियो । यसैक्रममा अर्का चर्चित समीक्षक राजकुमार बानियाँले पर्यटनका क्षेत्रमा विगत लामो समयदेखि क्रियाशील रहि सफल पर्यटन व्यवसायीका रुपमा परिचित रामप्रसाद सापकोटा लेखनका क्षेत्रमा समेत नवीन परिचय निर्माण गर्ने क्रममा आधा शताब्दी नामक संस्मरण लिएर देखा परेका बताए ।

यात्रा संयोजक तथा चर्चित नियात्राकार एवं सफल पर्यटन व्यवसायी राजेन्द्रमान डङ्गोलद्वारा कार्यक्रममा स्वागत मन्तव्य ब्यक्त गर्दै लेखक सापकोटाका बारेमा प्रकाश पारेका थिए । लेखकलाई शुभकामना दिने क्रममा पर्यटन व्यवसायी तथा नेपाली कांग्रेस धादिङका पूर्व सभापति रमेश धमलाले पर्यटन क्षेत्रमा देखेभोगेका अनुभूतिलाई समाविष्ट गर्दै सुन्दर संस्मरण निर्माण गरेकामा समकालीन मित्र सापकोटालाई बधाई दिंदै सफलताको शुभकामना व्यक्त गरे । उनले राजनीतिमा स्वच्छता आए मात्र विकास, निर्माणका काम सम्भव हुने उल्लेख गर्दै राजनीति स्वच्छ हुनुपर्नेमा जोड दिए ।

यसैक्रममा हिमालयन फार्मस्टेका प्रवन्ध सञ्चालक गीता अधिकारीले शहरको एकखालको भौतिक सुख सुविधालाई परित्याग गरी गाउँ फर्किएर कृषि क्रान्तिमा होमिएको बताइन् । उनले स्थानीय पर्यटन प्रवर्द्धनमा आफ्नो गाउँको प्रचार प्रसारका लागि बिशौं वर्षदेखि बाँझो रहेको पैत्रिक सम्पत्तिको रुपमा रहेको जमीनमा गरेको संघर्षको कथा सुनाउँदै यत्ति धेरै साहित्यकार, लेखकहरुको उपस्थितिले आफू चिप्लिएर लड्दाको चोटको पुरस्कार प्राप्त गर्ने अवसरका रुपमा साहित्यकारहरुलाई स्वागत गर्न पाएकोमा आभारी रहेको बताइन् ।

सोही अवसरमा स्थानीय जनसेवी राजेन्द्रदेव पाण्डेले सामान्य तह देखि सुरु गरिएको सरकारी सेवामा उच्च तहसम्म पुग्न सफल हुँदा समेत अवकाश पछिको जीवनको सहजतामा कुनै समस्या नहुने यथार्थ रहँदारहँदै पनि स्थानीय जनमानसमा उद्यमशीलता अभिवृद्धि बढाउनका लागि भौतिक सुख सुविधा त्यागेरै पनि गाउँमै केही गरौं भन्ने उद्देश्यले होम स्टे सञ्चालनको निर्णय गरिएको बताए । उक्त अवसरमा पर्यटन व्यवसायमा संलग्न आफ्ना मित्र रामप्रसाद सापकोटा ' आधा शताब्दी' संस्मरण मार्फत उदीयमान लेखकका रुपमा आएकामा खुशी व्यक्त गर्दै बरिष्ठ पर्यटन व्यवसायी राजेन्द्र सुवेदीले कृति सफलताको शुभकामना व्यक्त गरे ।

यसैक्रममा कृतिकार सापकोटाले आफू खासमा लेखनकर्ममा बामे सर्ने क्रममा रहेको भएपनि जीवन भोगाईका आरोह अवरोहलाई समाजको लागि उपयोगी हुने लागेर जनमानसका लागि आफ्ना निजी अनुभव प्रस्तुत गर्दा यदि समाज र सम्बन्धित क्षेत्रलाई थोरै भए पनि लाभ हुन्छ भने किन नगर्ने भन्ने सदाशयका साथ लेखिएको बताए । बोल्नुपर्ने सबैजसो कुरा आफूले कृतिमै उल्लेख गरिसकेको भन्दै कृतिमा वर्णित अनुभवमा कुनै छलछाम नगरिएको बताए ।

भानु नगरपालिका ९ का वडाध्यक्ष मीनबहादुर गुरुङले अध्यक्षता गरेका उक्त कार्यक्रममा आफ्नो धारणा राख्दै आफू पनि लामै समय प्रवासमा भासिएर गाउँमै केही गर्नुपर्छ भन्ने चेतले फर्किएको र शहरको सुख सुविधा त्यागेर घरवास (होम स्टे) कार्यक्रम सञ्चालन गर्ने व्यवसायी गीता अधिकारीको कार्यक्रममा समानता रहेको बताए । गीता अधिकारी र जनसेवी राजेन्द्रदेव पाण्डेले बारीको झाडी फाँडेर सुन्दर सम्रचना निर्माण गरे जस्तै आफूले पनि राजनीतिको झाडी फाँड्ने प्रयास गरिरहेको गुरुङले बताए । उनले आफ्नो स्थानीय क्षेत्रको प्रचार प्रसारमा साहित्यकारहरुको सार्थक लेखन प्रयासमा वडाको तर्फबाट पुस्तक प्रकाशनका लागि सक्दो योगदान पुर्याउने समेत उल्लेख गरे । उक्त कार्यक्रममा नागार्जुन वाङ्मय प्रतिष्ठानका अध्यक्ष दिल पौडेल, प्रभा बराल, पार्वती भट्ट, राजेन्द्रमान डङ्गोल, नवीन पल्लव, रामप्रसाद सापकोटा, माधव घिमिरे 'अटल' जयराम बिडारीलगायत एक दर्जन स्रष्टाहरुले आ-आफ्ना रचना वाचन गरेका थिए । नागार्जुन वाङ्मय प्रतिष्ठानका सचिव तथा सम्पादक समिक्षक माधव घिमिरे 'अटल'ले सहजीकरण गरेको उक्त कार्यक्रम भव्य रुपमा सम्पन्न गरिएको थियो ।

# संस्कृति शिरोमणि जोशी र संस्कृतिविद् लाकोजू सम्मानित




भक्तपुर । संस्कृति शिरोमणि हरिराम जोशी र संस्कृतिविद् एवम् साहित्यकार सूर्यप्रसाद लाकोजू सम्मानित भएका छन् । काभ्रे बनेपामा जन्मी काभ्रेको शिक्षा, साहित्य र संस्कृति क्षेत्रमा उल्लेखनीय योगदान पुर्याएका स्वर्गीय ज्ञानकाजी मानन्धर र उनका पिता मोहनलाल खिँको स्मृतिमा अक्षयकोष स्थापनासँगै संस्कृति शिरोमणि जोशी र संस्कृतिविद् लाकोजू सम्मानित भएका हुन् । सम्मानितमध्ये जोशीलाई ज्ञानकाजी- मोहनलाल खिं इतिहास गौरव सम्मान र साहित्यकार एवम् संस्कृतिविद् सूर्यप्रसाद लाकोजूलाई ज्ञानकाजी- मोहनलाल खिं संस्कृति गौरव सम्मान प्रदान गरिएको थियो । ती दुई व्यक्तिलाई नगद रू. १५ हजार रूपैयाँसहित सम्मान गरिएको थियो ।

ज्ञानकाजी- मोहनलाल खिँ स्मृति सेवा कोष स्थापनासँगै गरिएको सम्मान कार्यक्रममा प्रा डा. पुरूषोत्तमलोचन श्रेष्ठले मानिसलाई चिरकालसम्म चिनाउने उसको कर्म हुने उल्लेख गर्दै स्व. ज्ञानकाजी मानन्धर काभ्रे अध्ययनका लागि स्रोत व्यक्ति रहेको बताए ।

उनले इतिहास र संस्कृतिमा स्व. मानन्धरको योगदान प्रकाशित कृतिले प्रष्ट पारेको जनाए । प्रा. डा. श्रेष्ठले काभ्रेका ज्ञानकाजी मानन्धर, मोहन दुवाल, सूर्यप्रसाद लाकोजूका साथै इतिहासविद् हरेराम जोशी राष्ट्र रत्न रहेको चर्चा गरे । उनले संस्कृति शिरोमणि जोशी नेपालमा गणतन्त्रको विगुल फुक्ने पहिलो प्राज्ञ भएको जनाए ।

स्व. मानन्धरका छोरा प्रकाश मानन्धरले स्व. मानन्धरले शिक्षा, साहित्य, संस्कृतिको क्षेत्रमा पुर्याएको सन्दर्भ अविष्मरणीय रहेको उल्लेख गरे । उनले आफ्ना बाजे मोहनलाल खिँले कला, साहित्य, नाटक, मन्त्र आदिमा विशेष योगदान रहेको स्मरण गरे । उनले स्व. मानन्धरको सम्मानस्वरूप सन्तानद्वारा रू १० लाख रूपैयाँको अक्षयकोष स्थापना गरि शिक्षा, साहित्य र इतिहास क्षेत्रमा अध्ययन अनुसन्धान गर्न सहयोग गर्ने बताए ।

कार्यक्रममा वरिष्ठ साहित्यकार मोहन दुवालले राष्ट्रले सम्मान गर्नुपर्ने व्यक्तिलाई परिवारले नै सम्मानस्वरूप कोष स्थापना गरेको बताए । उनले सो कोष स्थापनाले राज्यलाई नै मार्गनिर्देशन गरेको स्मरण गरे । उनले स्व. मानन्धरलाई ज्ञानकाजी सरको रूपमा चिनेको, समाजसेवीका रूपमा, शिक्षासेवीको रूपमा, संस्कृतिविद्को रूपमा परिचित गरेको जनाए । उनले सम्मानित व्यक्तिको योगदानबारे चर्चा गरेका थिए ।

सम्मानित संस्कृति शिरोमणि हरेराम जोशीले स्व. ज्ञानकाजी मानन्धरले पुर्याएको योगदानसँगै उनको आनीबानी र संगतबारे स्मरण गरे भने सम्मानित संस्कृतिविद् लाकोजूले सांस्कृतिक निबन्धहरू लेखनको प्रेरक व्यक्ति स्व. मानन्धर रहेको बताए । कार्यक्रममा ईमेज च्यानलका सञ्चालक रघुवर मानन्धरले स्व. संस्कृतिविद् मानन्धरको योगदानको स्मरण गरे । उनले स्व. मानन्धर काभ्रेको नक्षत्र रहेको चर्चा गरे । बनेपा नगरपालिका वडा नं. ८ कि वडा अध्यक्ष शुभलक्ष्मी मानन्धरले स्व. मानन्धरको योगदान र राजनीतिक परिवर्तनका लागि पुर्याएको योगदानको चर्चा गरिन् ।

स्व. मानन्धरको निधन वि. सं. २०८० भदौ ८ गते भएको थियो । उनको वार्षिकीको अवसरमा परिवारका तर्फबाट स्मृति कोष स्थापना गरेको स्व. मानन्धरका छोरा भुवनकाजी मानन्धरले बताए ।

# संख्याको दम्भ नदेखाउन सरकारलाई चेतावनी




भक्तपुर । राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा) का प्रमुख सचेतक सन्तोष परियारले संख्याको दम्भ नदेखाउन सरकारलाई चेतावनी दिएका छन् । प्रतिपक्षीलाई पेल्ने नीति सत्तारुढ दल नेकपा (एमाले) र नेपाली कांग्रेसलाई महँगो पर्ने उनले चेतावनी दिएका हुन् । गत आइतबार नेपाल प्रेस सोसाइटीको सूर्यविनायकमा सम्पन्न अन्तरक्रियामा बोल्दै प्रमुख सचेतक परियारले सत्तारुढ दललाई नैतिकता नगुमाउन सुझावसमेत दिए । "सत्ता स्थायी हुँदैन, सत्तामा रहँदा राजनीतिक नैतिकता बिर्सनु हुदैन ।" उनले भने ।

संवैधानिक परिषदमा बलियो बन्ने नियतले सत्तारुढ दलहरु मिलेर उपसभामुख इन्दिरा रानालाई पद्च्युत गर्ने प्रपन्च रचेको उनले आरोप लगाएका छन् । "उप सभामुखले कार्वाही भोग्नुपर्ने स्तरको अपराध गर्नुभएको होइन, उहाँलाई स्पष्टीकरणको मौका दिनुपर्छ ।" उनले भने । हरेक कमजोरीमा कार्वाही गर्दै जाने हो भने ठुला दलका कोहि पनि बाकी नरहने उनको भनाइ छ । सो अवसरमा प्रमुख सचेतक परियारले रास्वपा पुराना दलको बिकल्पको रुपमा आएकाले पुराना दललाई टाउको दुखिरहेको दावी गरेका छन् । आगामी निर्वाचनमा पार्टीले प्रदेश र स्थानीय तहको चुनावमा पनि प्रतिस्पर्धा गर्ने संकेत गर्दै उनले भने, "रास्वपा डिलमा बसेर रमिता हेर्दैन, तीनै तहको निर्वाचनमा सामेल हुन्छ ।" यसकै लागि पार्टीले प्रदेश र स्थानीय समिति बनाएको उनले खुलासा गरेका छन् ।

त्यसैगरी रास्वपाकी केन्द्रीय सदस्य एवं प्रतिनिधि सभा सदस्य डा तोसिमा कार्कीले आफूहरू शासक नभई सेवक बन्न राजनीतिमा आएको उल्लेख गरेकी छन् । पूर्व मन्त्री समेत रहेकी डा कार्कीले छोटो समय सरकारमा सामेल भएको अनुभवले पार्टीलाई सुशासन र बिकासको मार्गमा सरकार हाक्न सक्ने हौसला र सामर्थ्य प्राप्त भएको बताइन् । कार्यक्रममा रास्वपाका केन्द्रीय सदस्य एवं संगठन बिभागका सचिव शंकर श्रेष्ठले असोज १ र २ गते हुने राष्ट्रिय भेलामा संगठनिक र बैचारिक बिकासका साथै बिधान संशोधन समेत हुने जानकारी दिए । भेलामा करिब २ हजार प्रतिनिधि सहभागी हुने उनको भनाइ छ । नेपाल प्रेस सोसाइटीका अध्यक्ष उपेन्द्रराज केसीको अध्यक्षतामा सम्पन्न कार्यक्रममा नेपाल पत्रकार महासंघ भक्तपुरका सचिव संजीप घिमिरे शुभचिन्तकले विषय उठान गरेपछि रास्वपाका नेताहरु र सहभागिहरु बीच अन्तरक्रिया चलेको थियो । सो अवसरमा रास्वपा जिल्ला सभापति रामेश्वर थापा, जिल्लाका सस्थापक नेता साजन बिक, नगर सभापतिहरुका साथै पत्रकारहरुको बाक्लो उपस्थिति रहेको थियो । कार्यक्रमको संचालन भने रोशन थापाले गरेका थिए ।



# भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्री भक्तपुरमा

भक्तपुर । भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्रालयका मा. मन्त्री बलराम अधिकारीले भक्तपुर नगरपालिका वडा नं. १ सल्लाघारीस्थित १०८ रोपनी जग्गाको स्थलगत निरीक्षण गेका छन् । उनलाई भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले स्वागत गरेको थियो । भक्तपुर नगरपालिकाले ख्वप विश्वविद्यालय संचालनको लागि उक्त जग्गा माग गरे पछि त्यसको वस्तुस्थिति बुझ्न मन्त्री अधिकारी भक्तपुर आएको हो ।

मन्त्री अधिकारीले नेपाल ट्रष्टको स्वामित्वमा रहेका जग्गाहरु संरक्षणका क्रममा देशभर रहेका जग्गाहरुको खोजी कार्य गर्दै त्यसको संरक्षण कार्य सुरु गरेको बताए । उनले भक्तपुर नपाले शिक्षा, स्वास्थ्य, सम्पदा संरक्षणलगायतका क्षेत्रमा गरिरहेको कार्य प्रशंसनीय भएको बताए । विश्वविद्यालय सञ्चालनको लागि १०८ रोपनी जग्गा उपभोग गर्न दिने विषयमा आफू सकारात्मक रहेको पनि बताए ।

निरीक्षणकै क्रममा उनले जग्गाको संरक्षण, सदुपयोग र व्यवस्थापनको विषयमा नेपाल ट्रष्ट र भक्तपुर नपाबीच आपसी समन्वय, सहकार्य र छलफल गरी अगाडि बढ्न सकिने बताउँदै ट्रष्टको जग्गा अतिक्रमण हुनबाट रोक्न जरुरी रहेको बताए । जग्गा सदुपयोग गर्ने बारे बृहत छलफल गरेर अगाडि बढ्न सकिने धारणा राख्दै ख्वप विश्वविद्यालय सञ्चालन स्वीकृतिको लागि सरकारले ढिलाइ गर्न नहुने धारणा राखे ।

भक्तपुर नगरपालिकामा भएको भेटपश्चात मन्त्री अधिकारीले भक्तपुर नपाबाट सञ्चालित ख्वप मावि, ख्वप कलेज, ख्वप कलेज अफ ल, ख्वप अस्पताल, ख्वप इन्जिनियरिङ कलेज र ख्वप कलेज अफ इन्जिनियरिङको पनि अवलोकन गर्नुभई त्यहाँको भौतिक अवस्थिति र शैक्षिक विशेषताहरुबारे जानकारी लिएको थियो ।

विश्वविद्यालय सञ्चालनको लागि भक्तपुर नपाले आवश्यक भौतिक पूर्वाधारहरुको निर्माण र जनशक्ति व्यवस्थापन कार्य पनि उल्लेखनीय भएको बताउँदै उनले ख्वप विश्वविद्यालयले चाँडै सम्बन्धन प्राप्त गर्नेमा आफू विश्वस्त रहेको बताए । सोही क्रममा भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले जनताको सुख, दुःखसँग सबैभन्दा नजिकको सरकार स्थानीय तहलाई अधिकार सम्पन्न बनाइनुपर्ने बताए । विश्वविद्यालय सञ्चालनको लागि आवश्यक भौतिक पूर्वाधारहरु निर्माणमा भक्तपुर नपाले जोड दिँदै आएको बताउँदै उहाँले भक्तपुर नगरपालिका विश्वविद्यालय सञ्चालन गर्न सक्षम रहेको बताए । भक्तपुर नपाले समाजवादी देशहरुबाट सिक्दै भक्तपुरमा समाजवादउन्मुख कार्यहरु गर्दै आइरहेको बताउँदै शैक्षिक क्षेत्रमा विशेष योगदान पुर्याउने उद्देश्यले विभिन्न विषयका कलेजहरु सञ्चालनमा जोड दिँदै आएको जानकारी दिए ।

# खतरामा हाम्रो डिजिटल इतिहास !

काठमाडौं । विगतमा कसैले पुराना अभिलेख बचाएकै कारण हामीले इतिहासबारे थाहा पाउन सकेका छौं। ११औं शताब्दी ताका बेलायतको नर्थम्बरल्याण्डमा कति संख्यामा पशुहरू पालिएका थिए भन्ने कुरा डोम्सडे पुस्तकबाट थाहा हुन्छ । जुन बेलायतको राष्ट्रिय अभिलेखालयमा राखिएको सबैभन्दा पुरानो दस्तावेज हो ।

चिठीपत्र र उपन्यासहरूमार्फत भिक्टोरियन युगको सामाजिक जीवन कस्तो थियो भनेर बुझ्न सकिन्छ । तर भविष्यका इतिहासकारलाई २१औं शताब्दीको सुरुवातमा हामीले हाम्रो जीवन कसरी बितायौं भन्ने कुरा बुझ्न सङ्घर्ष गर्नुपर्ने हुन सक्छ। यसको कारण हाम्रो जीवनमा डिजिटल प्रविधिको व्यापक प्रभाव र यस युगका सूचनाहरूको संरक्षण र अभिलेखमा प्रयास नगरिनु हो ।

तर केही संस्थाहरूले अहिलेको समयलाई जोगाउने काम गरिरहेका छन् । तीमध्ये धेरैजसो स्वयंसेवीका रूपमा कार्यरत छन् । वेबलाई बचाउने काममा अहिले इन्टरनेट आर्काइभ पर्यायवाची बनेको छ। यो सान फ्रान्सिस्कोमा आधारित एक अमेरिकी गैरनाफामूलक संस्था हो । सन् १९९६ मा इन्टरनेट पायोनियर ब्रुस्टर काहलले एक परियोजनाका रूपमा सुरुवात गरेका थिए । हालसम्म यस संस्थाले विश्वभरबाट ८६६ अर्ब वेब पेज, साढे चार करोड पुस्तक, एक करोड चलचित्र/टेलिभिजन कार्यक्रम लगायतका डिजिटल सामग्री सङ्कलन गरिसकेको छ । विश्वभरि छरिएका डेटा सेन्टरमा राखिएका इन्टरनेट आर्काइभका सामग्री र यस्तै काम गर्ने अन्य केही समूहले आजको डिजिटल संसारलाई बचाउने काम गरिरहेका छन् । इन्टरनेट आर्काइभको वेब्याक मसिनका निर्देशक मार्क ग्राहमका अनुसार यो एउटा यस्तो उपकरण हो, जसले वेबसाइटहरूको स्न्यापशट लिएर भविष्यका लागि सुरक्षित गर्ने गर्छ । यद्यपि अहिले इन्टरनेट आर्काइभ जस्ता संस्थाले वित्तीय जोखिम, प्राविधिक चुनौती, साइबर आक्रमण र कानुनी लडाईं भोग्नु परिरहेको छ । हालैमात्र इन्टरनेट आर्काइभले ठूलो कानुनी हार बेहोरेको छ । त्यसले इन्टरनेट अभिलेखिकरण गर्ने काम कतै क्षणिक त होइन भन्ने प्रश्न उब्जाएको छ ।

अहिले मनोरञ्जन, समाचार, कुराकानी जस्ता हरेक कुरा डिजिटल बनिरहेको छ । तर ग्राहम डिजिटल संसार स्वाभाविक रूपमा कमजोर र अस्थायी भएको बताउँछन् । हालै मात्र प्यू रिसर्च सेन्टरको एक अध्ययनले सन् २०१३ देखि २०२३ बीचका २५ प्रतिशत वेब पेज सदाका लागि हराइसकेको देखाएको छ । भविष्यका लागि ती हाम्रा इतिहास हुन सक्थे ।

हराउने कुरा छँदै छ, सँगै पुराना वेब पेजहरूमा समस्या भएको पनि उक्त अध्ययनले देखाएको छ । अध्ययनले सन् २०१३ मा खुल्ने वेब पेजमध्ये ३८ प्रतिशत आजकल नखुल्ने देखाएको छ । यो समस्या हालैका वर्षहरूमा पनि देखिएको पाइएको छ । उक्त अध्ययनले सन् २०२३ मा प्रकाशित भएका करिब आठ प्रतिशत वेब पेजहरू सोही वर्ष नै नचल्ने तथ्य उजागर गरेको छ ।

सोही अध्ययनका अनुसार पाँचवटा सरकारी वेबसाइटहरूमध्ये कम्तीमा एउटामा काम नलाग्ने लिङ्क हुने गर्छ । अनि आधाभन्दा बढी विकिपीडिया पेजहरूको सन्दर्भ खण्ड राखिएको लिङ्कले काम गर्दैन । यसले अनलाइन इन्साइक्लोपेडिया (विश्वकोश)को सूचना प्रमाणित गर्ने सन्दर्भ इन्टरनेटबाट हराउँदै गइरहेको अर्थ दिने विश्लेषण गरिएको छ । तर इन्टरनेट आर्काइभको वेब्याक मसिनले गर्दा सबैमा यस्तो अवस्था सिर्जना हुन दिएको छैन । यस परियोजनामा वेबसाइहरूलाई सुरक्षित गर्न रोबोटहरू प्रयोग गरिएको छ । जसले संसारभरका वेबसाइटहरू खोजेर तिनीहरूको वेबपेज भविष्यका लागि सुरक्षित गर्छन् । यसले गर्दा उक्त वेबसाइट काम नलाग्ने भए पनि ती कस्ता थिए र तिनमा के थिए भनेर भविष्यमा निःशुल्क हेर्न सकिन्छ ।

यस अर्थमा इन्टरनेट आर्काइभले अनलाइन समाजका अभिलेखहरू भविष्यका लागि सुरक्षित गरिरहेको छ। यसबाहेक अन्य केही सानाठूला संस्थाहरूले यही प्रकृतिको परियोजनाहरूमा काम गरिरहेका छन् । उदाहरणका लागि, अमेरिकी कांग्रेस पुस्तकालयले सरकारी वेबसाइट, कांग्रेस सदस्यहरूको साइट र अमेरिकी समाचार साइटहरूको संग्रह सुरक्षित राखेको छ। यस पुस्तकालयले ट्विटर (एक्स) को स्थापना भएदेखि सन् २०१७ सम्ममा गरिएका हरेक ट्वीटको प्रतिलिपि सुरक्षित राखेको छ। युके वेब आर्काइभले डट युके डोमेन नाम भएका वेबसाइटहरूको वर्षमा एकपटक भए पनि स्न्यापशट लिएर सुरक्षित गर्ने गर्छ। तर यी परियोजनाहरूको दायरा सीमित छ। अर्कोतर्फ इन्टरनेट आर्काइभले कुनै एक क्षेत्र अथवा देश नभएर विश्वभर आफ्नो काम गरिरहेको छ । अहिले उपलब्ध स्रोतहरूलाई हेर्दा इन्टरनेटमा आउने सबै कुरालाई अभिलेख गर्नु सम्भव छैन । यद्यपि यस्तो कामलाई फराकिलो बनाउन भने सकिन्छ ।

आजकल विकिपीडिया पेजमा मूल वेबसाइट लिङ्क गर्नुको साटो वेब्याक मेसिनमा राखिएको प्रतिलिपि प्रयोग गर्ने अभ्यास मानक बन्दै गइरहेको छ । हुन त यसले संस्थाले डिजिटल युगभन्दा पहिलेका मिडियादेखि आजको दिनसम्मका धेरै डिजिटल सामग्री सुरक्षित राखेको छ । उदाहरणका रूपमा यसमा सन् १९७७ को चर्चित कमेडी श्रृंखला 'फ्रेनउड टू नाइट' निःशुल्क हेर्न सकिन्छ । जुन कुनै पनि स्ट्रिमिङ प्लेटफर्ममा उपलब्ध छैन । किताब, पत्रपत्रिका र वेबसाइटमा पनि त्यस्तै अवस्था छ । तीमध्ये कतिपय किताब/पत्रपत्रिका भौतिक पुस्तकालयमा पाइँदैन । यसमा तपाईं आफैंले पनि भिडिओ, वेबसाइट जस्ता डिजिटल सामग्री यस संस्थाको सर्भरमा अपलोड गर्न सक्नुहुन्छ । जुन अरू कसैका लागि भविष्यमा निकै उपयोगी हुन सक्छ। यो फिचर यस संस्थाको सबैभन्दा राम्रो पक्ष हो। सन् २०२३ मा आफ्नो वेबसाइटबाट हजारौं समाचार हटाएपछि टेक समाचार वेबसाइट सीनेट (ऋलभ्त) विवादमा तानिएको थियो । उक्त कार्यले दशकौंको इतिहास हराएको विश्लेषण गरिएको थियो । यता सीनेटले भने हटाएका सबै समाचार वेब्याक मेसिनमा सुरक्षित गरिएको प्रतिक्रिया दिएको थियो ।

तर सम्झनु पर्नु कुरा इन्टरनेट आर्काइभ एक गैर नाफामूलक संस्था हो । प्राप्त हुने दानले यो संस्था चल्ने गर्छ । खासमा यो एउटा अन्त्यहीन परियोजना जस्तै हो । तर यसको सञ्चालन गर्न निरन्तर बढिरहेको छ। किनकि हामी जति इन्टरनेट आर्काइभमा निर्भर हुँदै जान्छौं, त्यसमा खतराहरू पनि त्यति नै बढ्दै जाने गर्छ ।

हालैमात्र गुगलमा सर्च गर्दा वेब्याक मसिनको लिङ्क पनि देखाउने गरी संस्थाले अल्बाफेट (गुगल)सँग साझेदारीको गरेको घोषणा गरेको छ। तर आइरहेका समाचारले यो परियोजना अझै कमजोर भएको देखाउँछ। किनकि इन्टरनेट आर्काइभविरुद्ध पुस्तक प्रकाशक, संगीत लेबल आदिले मुद्दा लगाएका छन् । यदि यी मुद्दा हारे संस्थाको अस्तित्वलाई नै खतरामा पर्न सक्ने विश्लेषणहरू गरिएको छ। यद्यपि यस प्रकारको संस्थालाई मुद्दा मात्र खतरा होइन । ब्रिटिश लाइब्रेरीको युके वेब आर्काइभले २०२३ को अक्टोबरमा साइबर आक्रमणको सामना गर्नु पर्यो । यसको असर अहिले पनि परिरहेकै छ ।

यता इन्टरनेट आर्काइभले पनि गत मे २०२४ मा डीडस (म्म्यक) आक्रमणको सामाना गर्नु परेको थियो। केही समय वेब्याक मेसिन अफलाइन समेत भएको थियो ।

एक व्यक्तिबाट सुरु भएको इन्टरनेट आर्काइभ अहिले इन्टरनेटको केन्द्रबिन्दु जस्तै बनेको छ। तर यसलाई सञ्चालन गर्न त्यति सजिलो छैन । यो एउटा संस्था भएकाले कानुनी ढाँचामा मात्र बस्नु पर्ने छँदै छ । सँगै दैनिक रूपमा थपिने हजारौं इन्टरनेट सामग्रीलाई अभिलेख गर्न प्राविधिक पाटो पनि बलियो बनाउनु पर्ने छ ।

यदि अहिले नै इन्टरनेट आर्काइभको काम रोकिए र यस्तै अर्को संस्था नआए सार्वजनिक वेबमा उपलब्ध धेरै कुरा हराउन सक्ने ग्राहम चेतावनी दिन्छन् । तर उनी अहिले नै आफ्नो जिम्मेवारीबाट पछि नहट्ने सान्त्वना दिन्छन् ।

अब इन्टरनेटका सामग्रीलाई बचाउन प्राथमिकीकरण र विकेन्द्रीकरण गर्नु पर्ने भर्जिनिया विश्वविद्यालयकी प्रविधि इतिहासकार मार हिक्स बताउँछिन् । उनी इन्टरनेटलाई जानकारी र सामग्रीहरूको फोहोरको पाइप मानिन्छन् । उनका अनुसार फोहोर पाइपबाट निस्केको सबै कुरा समात्ने प्रयास गर्नु स्रोतको दृष्टिकोणबाट उपयुक्त हुँदैन ।

यसैकारण डिजिटल संसारमा भएका केलाई बचाउने भनेर प्राथमिकीकरण गर्नुपर्ने उनी सुनाउँछिन् । नत्र लोकप्रिय वेबसाइटहरूको डुप्लिकेट वा ट्रिप्लिकेट प्रतिलिपिहरू हुने र बेवास्ता गरिएका अन्य इतिहासबाट हराउने उनको भनाइ छ ।

त्यस्तै डिजिटल प्रिजरभेसन कोअलिशनका एन्ड्रु ज्याक्सन पनि इन्टरनेटका सबै कुरा सुरक्षित गर्न धेरै महँगो पर्ने सुनाउँछन् । उनी पश्चिमी संसारबाहेकका अन्य ठाउँको संसारलाई कम अभिलेख गरिएको स्वीकार गर्छन् । र यसका लागि पर्याप्त ठाउँ भएको बताउँछन् ।

इन्टरनेट अभिलेख गर्न प्रायः स्वतन्त्र समूह सक्रिय रहेको उनको बुझाइ छ । उनीहरूले आफ्नो फुर्सदको समयमा यस्तो काम गर्ने र जिम्मेवार निकायहरू भने आफ्नो जिम्मेवारी पूरा नगरी बस्ने उनी आरोप लगाउँछन् ।

इतिहासकार हिक्स भन्छिन् कि इन्टरनेटलाई अभिलेख गर्ने जिम्मेवारी कसको हो वा कसको चासो हुन्छ त्यो स्पष्ट छैन । तर अभिलेखको संरक्षणमा हामी सबैले समर्थन गर्नु पर्ने उनी मत राख्छिन् । इन्टरनेट अभिलेखको मुख्य उद्देश्य केवल सामग्री सङ्कलन गर्नु मात्र नभएर अनिश्चित भविष्यसम्म टिकाइरहनु भएको उनको भनाइ छ ।

# प्रेमकृष्ण माक श्रेष्ठ स्मृति दोश्रो जिल्ला व्यापी कराते प्रतियोगिता २०८१ सम्पन्न

भक्तपुर , नेपाल सितोरियो कराते डो थिमि शाखा डोजोद्वारा आयोजित प्रेमकृष्ण माक श्रेष्ठ स्मृति दोश्रो भक्तपुर जिल्ला व्यापी कराते प्रतियोगिता २०८१ मा आयोजक थिमि डोजो ८ स्वर्ण, ५ रजत र ८ कास्य पदक सहित प्रथम हुन सफल भएको छ। मध्यपुर थिमि नगरपालिकाका प्रमुख सुरेन्द्र श्रेष्ठ्को प्रमुख आतिथ्यता तथा उपप्रमुख बिजय श्रेष्ठ्को बिशेष आतिथ्यतामा सम्पन्न भएको उक्त प्रतियिगितामा भक्तपुर मेन डोजो ५ स्वर्ण, ३ रजत र २ कास्य पदक सहित द्बितिय तथा नगदेश डोजो २ स्वर्ण, ४ रजत र ४ कास्य पदक सहित तृतिय भएको छ ।

प्रतियोगोताको उत्कृष्ट पुरुष खेलाडीको उपाधि थिमि डोजोका अनिल श्रीबास्तबले हात पारे भने उत्कृष्ट महिला खेलाडीको उपाधि भक्तपुर मेन डोजोका करिष्मा तामाङ्गले चुमिन। उदयमान खेलाडीको उपाधि झौखेल डोजोका जेनिश सुलले हात पारे भने उत्कृष्ट टिमको रुपमा थिमि डोजोले बाजी मारे ।

पुरुष एकल काता तर्फ साहाश तामाङ्ग (भनपा) प्रथम, युशेन उप्रेती (दधिकोट डोजो) द्बितिय, अमन बिक (थिमि डोजो) तृतिय तथा सम्राट तामाङ्ग (नगदेश डोजो) चौथो हुन सफल भए ।

महिला काटा तर्फ श्रेया रंजितकार (थिमि डोजो) प्रथम, युनेन उप्रेती (दधिकोट डोजो) द्बितिय, बर्षा श्रेष्ठ (बिनायक शिक्षा निकेतन) तृतिय तथा मिस्ती श्रेष्ठ (नगदेश डोजो) चौथो बन्न सफल भए । प्रतियोगिताको पुरुष खुल्ला तर्फ सुर्य सांघ (भनपा) प्रथम, समिपे गौतम (नगदेश डोजो) द्बितिय, प्रेसन श्रेष्ठ (थिमि डोजो) तृतिय तथा सिदार्थ श्रेष्ठ (थिमि डोजो) चतुर्थ भए भने महिला खुल्ला तर्फ श्रेया रंजितकार (थिमि डोजो) प्रथम तथा शृजा जोशी (नगदेश डोजो) द्बितिय बन्न सफल भए ।

प्रतियोगोताको पुरुष २५ किलो तौल समुह तर्फ बिष्णु थापा नगदेश डोजो प्रथम, बिश्वदिप थापा श्री संजय शाही दोश्रो, युशेन उप्रेती दधिकोट डोजो र साहास तामाङ्ग भनपा तेश्रो भए । ३० किलो तौल समुह तर्फ रोजित कासुला भक्तपुर मेन डोजो प्रथम, अजय तामाङ्ग थिमि डोजो दोश्रो, एलेक्स तामाङ्ग निलबाराही डोजो र जेनिश राई नगदेश डोजो तेश्रो भए । ३५ किलो तौल समुह तर्फ जेनिश सुल झौखेल डोजो प्रथम, आयुश तामाङ्ग भक्तपुर मेन डोजो दोश्रो तथा आयुश तामाङ्ग थिमि डोजो र बिपुल त्वायना भनपा तेश्रो भए ।

पुरुष ४० किलो तौल समुह तर्फ सुमन सुबेदी भक्तपुर मेन डोजो प्रथम, उदेश अवाल भनपा दोश्रो तथा युसान राई थिमि डोजो र निशान मगरान्ती एडभान्स डोजो तेश्रो भए । ४५ किलो तौल समुह तर्फ अनमोल श्रीबास्तब थिमि डोजो प्रथम, राज शाही थिमि डोजो दोश्रो तथा नबराज खडका दधिकोट डोजो र साहिल धाण्डो झौखेल डोजो तेश्रो भए । ५० किलो तौल समुह तर्फ आनिश श्रीबास्तब थिमि डोजो प्रथम, प्रबिण हमाल भक्तपुर मेन डोजो दोश्रो तथा मनिराज मगर एडभान्स डोजो र अनिल घर्तीमगर बिध्या आर्जन डोजो तेश्रो हुन सफल भए । ५५ किलो तौल समुह तर्फ शुसिल तामाङ्ग थिमि डोजो प्रथम, चुबिन लामा भक्तपुर मेन डोजो दोश्रो तथा उज्ज्वल तामाङ्ग सिएलए डोजो र प्रितम राई थिमि डोजो तेश्रो हुन सफल भए ।

पुरुष ६० किलो तौल समुह तर्फ अभिषेक लामा भक्तपुर मेन डोजो प्रथम, बिशाल तामाङ्ग थिमि डोजो द्बितिय तथा निशान्त मोक्तान थिमि डोजो र केशब श्रेष्ठ एडभान्स डोजो तृतोय हुन सफल भए । ६७ किलो तर्फ प्रथम श्रेष्ठ थिमि डोजो प्रथम तथा आयुष कपाली थिमि डोजो द्बितिय हुन सफल भएका छन ।

महिला ३० किलो तौल समुह तर्फ करिष्मा तामाङ्ग भक्तपुर मेन डोजो प्रथम, सेहिका श्रेष्ठ दधिकोट डोजो द्बितिय तथा अनुस्का सुवाल झौखेल डोजो र रितिका सापकोटा थिमि डोजो तृतिय भए । ३५ किलो तौल समुहमा पुर्णिमा खत्री भक्तपुर मेन डोजो प्रथम, बर्षा श्रेष्ठ बिनायक शिक्षा निकेतन डोजो द्बितिय तथा प्रबिशा राई बिनायक शिक्षा निकेतन डोजो र अम्बिका तामाङ्ग नगदेश डोजो तृतिय भए । ४० किलो तर्फ सदिक्षा थापा मगर श्री संजय डोजो प्रथम, अस्मिता तामाङ्ग नगदेश डोजो दोश्रो तथा सारिका उप्रेती भनपा र करुणा लामा भक्तपुर मेन डोजो तृतिय हुन सफल भए । ४५ किलो तर्फ प्रतिभा मगर थिमि डोजो पहिलो, अस्मिता थापा नगदेश डोजो दोश्रो तथा हर्सिका श्रेष्ठ भक्तपुर मेन डोजो र मदिमा योन्जन गणेशस्थान डोजो तेश्रो भए । ५० किलो तर्फ मिस्ती श्रेष्ठ नगदेश डोजो प्रथम, युनेन उप्रेती दधिकोट डोजो द्बितिय तथा नमुना खड्का दधिकोट डोजो र प्रश्ना राई झौखेल डोजो तेश्रो भए। ५५ किलो तर्फ स्तिा मगर थिमि डोजो प्रथम, स्वर्णिम ह्यौमिखा झौखेल डोजो द्बितिय भए । ६० किलो तौल समुह तर्फ कृतिका तज झौखेल डोजो प्रथम तथा प्राप्ती श्रेष्ठ थिमि डोजो द्बितिय हुन सफल भईन ।

प्रतियोगितमा पदक प्राप्त गर्ने सम्पुर्ण खेलाडीहरुलाई समापन कार्यक्रमका प्रमुख अतिथि मध्यपुर थिमि नगरपपालिका वडा न ४ का अध्यक्ष बालकृष्ण श्रेष्ठ तथा बिशेष अतिथि नेपाल सितोरियो कराते डोका अध्यक्ष तथा कराते महासंघका महासचिब दावा गुरुङ्ले संयुक्त रुपमा पदक तथा प्रमाणपत्र प्रदान गरेका थिए ।

## खोला किनारा.....

निवेदनमा भनिएको छ,’ यस्ता विषयमा भौगोलिक अवस्था, जनघनत्व, जग्गा तथा संरचना अधिग्रहण गर्दा लाग्ने अनुमानित लागत, सोबाट व्यक्ति संस्था, समुदाय, निकायलाई पर्ने प्रभाव र असरसमेतलाई मूल्याङ्कन, विश्लेषण गरी कार्यपालिकाले निर्णय गर्नुपर्नेमा उल्लिखित आदेश सो को प्रतिकूल छ ।’ निवेदनमा उल्लेख गरिएको छ ।

अदालतको आदेश सधैँ र सबै अवस्थामा कार्यान्वयन योग्य हुन नसकी यस्तो विषय न्यायिक व्यवस्थापकीय मापदण्डभन्दा बाहिरसमेत पर्न आउने हुँदा अन्य स्वायत्त निकायले लिने र लिनुपर्ने नीतिगत निर्णयका विषयमा अदालतले हस्तक्षेप नगरी स्वेच्छिक रुपमा न्यायिक आत्मसंयम अपनाउन वाञ्छनीय देखिन आउँछ भन्ने सिद्धान्त विपरीत भएको निवेदनमा उल्लेख छ ।

पुनरावलोकन निवेदनमा भनिएको छ, ‘आदेश सर्वोच्च अदालतबाट सन्दिप शाहसमेत विरुद्ध काठमाडौं उपत्यका नगर विकास समितिसमेत भएको मुद्दामा प्रतिपादित, राज्यले नागरिकको बसोबासको अधिकारको सकारात्मक कार्यान्वयनका लागि संविधानले नै दायित्व सृजना गरी राखेको अवस्थामा कुनै नागरिकले आफ्नो सामर्थ्यबाट सिर्जना गरेको बसोबाससँग सम्बन्धित साम्पत्तिक हकमा अतिक्रमण गर्ने कुरा सामान्य अवस्थामा कल्पनासमेत गर्न सकिँदैन ।’

नागरिकको मौलिक हकका रुपमा संविधानले स्थापित गरेको यस्तो अधिकार कार्यान्वयन गर्न राज्यलाई केही पूर्वतयारी आवश्यक पर्नु एउटा पक्ष हुन सक्ने भएको पुनरावलोकन निवेदनमा भनिएको छ । भइरहेको बसोबासमाथि हस्तक्षेप गरी निर्वाध रुपमा उपभोगमा असर पुऱ्याउने काममा राज्य क्रियाशील हुन नहुने भनी प्रतिपादित सिद्धान्त समेतको प्रतिकूलमा हुँदा सो परमादेशको आदेश जारी हुने गरी भएको फैसला पुनरावलोकन गर्न भनिएको छ ।

अदालतबाट देवी महर्जन विरुद्ध सडक विभागसमेतको मुद्दामा मिति २०८० असोज २२ मा आदेश हुँदा अन्य कुराका अतिरिक्त विकास निर्माणका क्रममा विस्थापनलाई न्यूनतम गरिनुपर्ने र कम भन्दा कम व्यक्तिलाई क्षति पुग्ने गरी विकास निर्माण गरिनुपर्छ भन्ने विकल्पविहीन अवस्थामा बाहेक व्यक्तिको आवासको सुरक्षालाई असरपर्ने गरी कुनै कार्य गर्नु हुँदैन भन्ने सिद्धान्त प्रतिपादन भएको निवेदनमा उल्लेख छ ।

‘संवैधानिक सीमाभित्र रही सरकारले नागरिकको हित र मुलुकको विकासका लागि स्रोत र साधनको समुचित व्यवस्थापन गर्दै क्रमश कार्यान्वयन गर्नुपर्ने विषयमा कुनै विश्लेषण नगरी, प्रभाव, असर सम्बन्धमा कुनै तथ्य, तथ्याङ्क पत्ता नलगाई भएको आदेश कार्यान्वयन गर्दा के कस्तो असर-प्रभाव पर्छ ?,’ निवेदनमा भनिएको छ, ‘के कति घर, जग्गाहरु अधिग्रहण गर्नुपर्ने हुन्छ ? यसरी अधिग्रहण गर्दा सोको क्षतिपूर्ति बापत के कति रकम आवश्यक पर्छ ? सो कार्य गर्दा त्यस क्षेत्रमा बसोवास गर्ने जनता, बैंक तथा वित्तिय संस्था तथा सरकारलाई के कस्तो प्रभाव असर पर्छ भन्ने सम्बन्धमा मिति २०८१ भदौ १६ मा गठन भएको कार्यदलले २०८१ भदौ २५ मा दिएको प्रतिवेदन बमोजिम काठमाडौँ उपत्यकामा १९ वटा खोला रहेको हुनाले ती खोलाको दायाँबायाँ अदालतको आदेश बमोजिमको क्षेत्रभित्र करीब आठ हजार तीन सय चार घर तथा टहरा र करिब ३० हजार रोपनी जग्गा समेटिने देखिन्छ ।’

पुनरावलोकन निवेदनमा अदालतको आदेश कार्यान्वयन गर्दा यससम्बन्धी प्राविधिकबाट भएको प्रारम्भिक अध्ययनबाट उल्लिखित संरचना तथा जग्गाको मूल्य बमोजिम अधिग्रहण गर्न करिब २१ खर्ब २६ अर्ब लाग्ने, जुन रकम वर्तमान वार्षिक पूँजीगत खर्चको हिसाबले झण्डै सात वर्षको, विकास बजेट बराबर हुने अनुमान गरिएको उल्लेख छ ।

निवेदनमा उक्त क्षेत्रको घर जग्गालाई बैङ्क तथा वित्तिय संस्थामा धरौट राखि धेरै व्यक्तिले कर्जा लिएको अवस्था भएको र ती बैंक तथा वित्तिय संस्थाको रकमसमेत सङ्कटमा पर्ने, सो क्षेत्रमा बसोवास गर्ने ठूलो सङ्ख्याका जनता पुनःवाससम्बन्धी समस्यामा पर्ने, सरकार र सम्बद्ध निकायवाट प्रचलित कानुन, मापदण्ड बमोजिम स्वीकृति, मान्यता दिएकोमा पुनःफरक मापदण्डका आधारमा सोही स्थानका जमिन तथा संरचना अधिग्रहण गर्नाले राज्यप्रति तीव्र असन्तोष उत्पन्न हुन सक्ने भनिएको छ ।

विगतमा राज्यसंयन्त्रको प्रयोग परी पहुँचको आधारमा सरकारी र पर्ति जग्गा व्यक्तिगत नाममा ल्याउने कार्य र उपत्यकामा रहेका खोलाहरुको दायाँ बायाँ पहुँच र राज्यसंयन्त्रकै बलमा अतिक्रमण भएको र गैर कानूनी रुपमा सुकुम्वासीको नाममा समेत जग्गा अतिक्रमण हुँदा बर्षाको समय उपत्यकाका विभिन्न स्थानमा डुवानका कारण हुने गरेको क्षति न्यूनिकरण गर्न आवश्यक छ । खोला किनाराको विषयमा पुनरावलोकन हुनु आवश्यक छ । तर यो पुनरालोवकन भूमाफिया र गैर सुकुम्बासीको हकमा हुन नहुने सरोकारवालाहरुको धारणा रहेको छ । अहिलेको अवस्थामा यो पुनरावलोकनले बढी मात्रामा भुमाफिया र गैर कानुनी रुपमा खोला किनारा मिचेर बसेका सुकुम्बासीहरुको हित हुने देखिन्छ । यसर्थ पुनरावलोकन गर्दा बास्तविक जग्गाधनीहरुको विषयमा अध्ययन गरेर पुनरावलोक हुन आवश्यक छ ।

## सल्लाघारीको...

पार्टीका सचिव एवम् सांसद प्रेम सुवाल, भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिसहितको प्रतिनिधि टोलीले भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्रालयका मा. मन्त्री बलराम अधिकारीसँग भेटी भक्तपुर नगरपालिकाले सञ्चालन गरिने ख्वप विश्वविद्यालय सञ्चालनको लागि नेपाल ट्रष्टको नाममा रहेको सल्लाघारीस्थित १०८ रोपनी जग्गा उपलब्ध गराउन सोमबार ध्यानाकर्षण गराएको थियो ।

मन्त्री अधिकारीले देशैभरि नेपाल ट्रष्टको नाममा रहेको जग्गाको खोजी कार्य भइरहेको जानकारी दिदै ट्रष्टको नाममा रहेको जग्गा संरक्षण र सदुपयोग गर्ने नीतिअनुसार अगाडि बढिरहेको बताए । उनले नेपाल ट्रष्टको स्वामित्व कायम हुने ढंगले सल्लाघारीको १०८ रोपनी जग्गा उपयोग गर्ने विषयमा आफू सकारात्मक रहेको बताउँदै ट्रष्टको नीतिअनुसार उक्त जग्गा नगरपालिकालाई दिन मिल्ने नमिल्ने अध्ययन गरिने समेत जानकारी गराए ।

ट्रष्टको स्वामित्वमा रहेको जग्गा व्यापारिक वा सेवामूलक लिजमा दिने विषयमा आवश्यक छलफल गरिने बताउँदै मन्त्री अधिकारीले संरक्षणको अभावमा सल्लाघारीको १०८ रोपनी जग्गा दुरुपयोगको सम्भावना भएको हुँदा उक्त क्षेत्र संरक्षण र संबर्द्धन गर्न दुवै पक्षले सहकार्य गरी अगाडि बढ्नुपर्नेमा जोड दिए । भेटमा सांसद सुवालले सल्लाघारीस्थित १०८ रोपनी जग्गाको पृष्ठभूमिबारे प्रष्ट पार्दै भक्तपुर नपाले मेडिकल कलेजसहितको ख्वप विश्वविद्यालय सञ्चालन गर्न पटक पटक सल्लाघारीको उक्त जग्गा माग गर्दै आएको बताए । उक्त क्षेत्रमा जग्गा अतिक्रमणका कारण क्षेत्रफल घटेको बताउँदै उनले भक्तपुर नपाले १०८ रोपनी जग्गा संरक्षण र संवर्द्धनको लागि पर्खाल निर्माण गरी संरक्षण र व्यवस्थापन समेत गर्दै आइरहेको प्रष्ट पारे ।

सांसद सुवालले सार्वजनिक जग्गा मिच्नु पनि भ्रष्टाचार भएको बताउँदै देशविदेशका विद्यार्थीहरुलाई अध्ययन अनुसन्धानमा अग्रसर बनाउन ख्वप विश्वविद्यालयको अवधारणालाई अगाडि ल्याइएको जानकारी गराए । सोही क्रममा नगर प्रमुख प्रजापतिले मन्त्री अधिकारीसमक्ष ध्यानाकर्षण पत्र हस्तान्तरण गर्दै भक्तपुर नगरपालिकाले नेपाल ट्रष्टको सहमतिमा नगरपालिकाको खर्चमा १०८ रोपनी जग्गाको चारैतर्फ पर्खाल लगाइ आवश्यकताअनुसार ५ वटा गेटको व्यवस्था गरी उक्त क्षेत्रको संरक्षण गर्दै आइरहेको बताए ।

भक्तपुर नगरपालिकाद्वारा सञ्चालित शैक्षिक संस्थाहरुको स्थापनाको उद्देश्यबारे प्रष्ट पार्दै उनले कलेज स्थापनादेखि हालसम्म ख्वप उच्च माविमा २३ हजार ७४५, ख्वप इन्जिनियरिङ कलेजमा ५ हजार ४५, ख्वप कलेजमा ८ हजार ७३३, ख्वप बहुप्राविधिक अध्ययन संस्थानमा १ हजार ५५४, ख्वप कलेज अफ इन्जिनियरिङमा २ हजार ६०३ र ख्वप कलेज अफ लमा १ सय २० गरी जम्मा ४१ हजार ७९८ जना विद्यार्थीहरु भर्ना भइ अध्ययन गरिसकेको तथ्यांक प्रस्तुत गरे । नेपाल ट्रष्टको नाममा रहेको सम्पत्ति ‘विद्यालय, महाविद्यालय जस्ता शैक्षिक तथा प्राज्ञिक संस्थाहरु खडा गरी सञ्चालन गर्न वा त्यस्तो संस्था सञ्चालनको लागि अनुदान प्रदान गर्न’ प्रयोग गर्न सकिने कानुनी व्यवस्था रहेको उल्लेख गर्दै प्रमुख प्रजापतिले १०८ रोपनी जग्गा ख्वप विश्वविद्यालय सञ्चालन गर्न भक्तपुर नगरपालिकालाई उपलब्ध गराइदिन अनुरोध गरे ।

२०८० फागुन ४ गते संघीय संसद, प्रतिनिधिसभाअन्तर्गत शिक्षा, स्वास्थ्य तथा सूचना प्रविधि समितिबाट ‘ख्वप विश्वविद्यालय विधेयक २०८० ’ समितिबाट अगाडि बढाउन अनुरोधपत्र हस्तान्तरण भएको स्मरण गर्दै उनले जनतालाई सस्तोमा गुणस्तरीय शिक्षा प्रदान गर्ने उद्देश्यले भक्तपुर नपाले विभिन्न विषयगत कलेजहरु सञ्चालन गर्दै आइरहेको जानकारी दिए ।

उक्त भेटमा भक्तपुर नपाका प्रमुख प्रशासकीय अधिकृत वसन्त भट्टराइ, ख्वप इन्जिनियरिङ कलेजका प्राचार्य सुजन माक, ख्वप कलेज अफ इन्जिनियरिङका प्राचार्य सुनिल दुवाल, प्रशासकीय अधिकृत दामोदर सुवाललगायतको उपस्थिति रहेको थियो । सोही क्रममा नगर प्रमुख प्रजापतिसहितको टोलीले कानुन सचिव उदयराज सापकोटा र सहसचिव निर्मला अधिकारी भटटराईसँग भेट गरी ख्वप विश्वविद्यालय विधेयक अगाडि बढाइ दिन आग्रह गरे ।

ख्वप विश्वविद्यालय विधेयक शिक्षा मन्त्रालय, अर्थमन्त्रालय हुँदै अहिले कानुन मन्त्रालयमा विचाराधीन रहेको छ । कानुन सचिव सापकोटाले ख्वप विश्वविद्यालय विधेयकबारे आफूहरु सकारात्मक भएको बताउँदै चाँडै नै प्रक्रिया अगाडि बढाउने जानकारी दिए ।

## जिब्रो.....

सम्बद्ध सबै पक्षलाई गत बिहीबार नगरपालिकाको कार्यकक्षमा सुरक्षा निकाय, जात्रा व्यवस्थापन समिति र संचारकर्मीहरुको बैठकलाई सम्बोधन गर्दै आव्हान गरेको छ ।

तीन सय पचास वर्षअघिदेखि जिब्रो छेड्ने जात्राको आयोजना हुँदै आएको परम्परागत यस जात्राका निम्ति नगरपालिकाले आवश्यक आर्थिक सहयोग गर्ने प्रतिबद्धता व्यक्त गरे । थिमिदेखि पशुपतिसम्मका यात्रामा संस्कृति पर्यटन तथा नागरिक उड्यनमन्त्रीलगायतका बिशिष्ट व्यक्तिहरुको सहभागिता रहने जानकारी आफूलाई प्राप्त भएको पनि नगर प्रमुख श्रेष्ठले उक्त बैठकमा जानकारी गराएको छ ।

जात्रामा फलामले बनेको अन्दाजी १० इन्च लामो तलतिर ३ वटा सुइरो निस्केको नातुले जिब्रो छेड्दा पनि रगत नआउने दैवीशक्ति रहेको कथन रहेको छ । यसरी जिब्रो छेडेपछि जिब्रो छेड्ने व्यक्तिलाई कष्ट नहोस् र दुखाई कम गर्न परिक्रमाको क्रममा बिच बिचमा शुद्ध तोरीको तेल जिब्रोमा राखिदिने गर्दछ । जसले जिब्रो छेड्ने व्यक्तिलाई सहनशक्ति प्रदान गर्दछ । जात्रा रातको समयमा हुने भएकोले तत्कालिन समयमा बतिको व्यवस्था नभएको कारण मानन्धर समुदायबाट याँ मता लामो बाँसको टुप्पामा ३ वटा बत्ति अगाडि र पछाडि बालेर जात्रालाई बाटो देखाउने गरिन्छ । जुन यस जात्राको क्रममा अद्यापी रहेको छ ।

गतवर्ष २०८० सालमा जिब्रो छेडेर पशुपतिनाथसम्मको यात्रा गरका मध्यपुरथिमि नगरपालिका-५ चोडेटोल निवासी बालकराम नानीचा श्रेष्ठले दैवी शक्तिको बलमा आफूले पशुपतिसम्मको यात्रा गर्न सफल रहेको अनुभूति व्यक्त गर्दै तान्त्रिक शक्तिप्रति बेवास्ता गर्न नहुनेमा जोड दिए ।

यसअघि २०७५ सालमा जिब्रो छेडेर थिमि घुमेको बालकरामले गतवर्ष जिब्रो छेडेर महाद्विप बोकेर मध्यपरथिमिदेखि पशुपतिसम्म र पशुपतिबाट मध्यपुरथिमिको बालकुमारीसम्म आएर सियो झिकेर जात्रा सम्पन्न गरेको थियो । यसैलाई निरन्तरता दिन यस वर्ष गजु श्रेष्ठले आफूले पनि पशुपतिनाथ मन्दिरसम्मको यात्रा गरेर सम्पूर्ण थिमिबासीको सुख, शान्ति र प्रगतिको कामनासहित यो यात्रा सफल बनाउन सबैको साथ र सहयोगको अपेक्षा गरेको सो भेलामा बताए ।

यैंया पुन्हिया म्यः प्वाखनेगु जात्रा व्यवस्थापन समितिका अध्यक्ष चन्द्रभक्त श्रेष्ठले १७ किलो मिटरको यात्रा मध्यपुरथिमिबाट गुह्येश्वरी हुँदै पशुपतिनाथको दर्शनपछि पुनः मध्यपुरथिमिको बालकुमारी आएर सुइरो निकालेपछि जात्रा समापन हुने जानकारी दिए । साथै यस वर्षको जात्रामा रु ६-७ लाख खर्च हुने अनुमान रहेको जानकारी दिए ।

# नदी किनाराको दोहन हुनुमा सरकार नै जिम्मेवार

प्रा.डा. भरत शर्मा

उपत्यका नदी किनारामा थप २० मिटर छोडेर मात्रै संरचना बनाउन पाउने भनेर अदालतबाट आएको फैसलाले तरंग ल्याएको छ । यसमा धेरै विवादहरू पनि आए । झन्डै ३० वर्ष अगाडि एक समूह बनेको थियो- बागमती बचाउने सन्दर्भमा । त्यसमा दिवंगत हुतरामा वैद्य, पत्रकार कनकमणि दीक्षितसँगै हामी पनि लागेका थियौं । त्यो बेला हामीले यस्तो फोहोर र पानी कम आउने बागमतीमा सद्गत नगरियोस् भनेर माग पनि राखेका थियौं ।

बागमती प्रदूषित हुनुमा पछाडि प्रमुख दोषी ठूला दलका नेता नै हुन् । ती सुकुम्वासी त्यसै त्यहाँ आएर बसेका हैनन् । आफ्ना मतदाता भनेर संरक्षण गरेर राखिएको हो । अझ सुरक्षित आश्रय स्थल दिएर बसाइएको हो । त्यस कारण नदीनाला अतिक्रमित भएको हो ।

यो अतिक्रमणको सन्दर्भमा सुकुम्वासी ननफर्मर सेक्टर मात्रै होइन, म त सरकारलाई पनि अतिक्रमणकारीमा राख्छु । किनकि अहिले बागमती कोरिडोर धोबीखोला कोरिडोर दुनियाँभर जुन बाटो बनेको छ, त्यो सबै नदी बहाव क्षेत्र हो । विगत ५० वर्षको अध्ययन गर्दा नदीको बहाव क्षेत्रमा जब बाढी आउने हुन्छ, त्यो नदीको विस्तार हुने क्षेत्र हुन्छ, त्यो नदीको अधिकार क्षेत्र हो । त्यो सबैलाई सरकारले मिचेर अतिक्रमण गऱ्यो । त्यसमा सबै कुरा जोडिएका छन् ।

अहिले सर्वोच्च अदालतले फैसला गरेको कुरामा पनि सरकार भ्याकेटमा गएको छ । यो भनेको घाउ आफैँ लगाउने र औषधी लगाउनु पऱ्यो भनेर उपचार खोजेको जस्तै हो । वास्तवमा यो वृहत् रूपमा विश्लेषण गर्ने हो भने नदीको बहाव क्षेत्र जुन छ, जस्तो धेरै पानी परेको बेलामा पनि खोलाको पानी आएर डुबायो रे भन्ने चर्चा आइरहन्छ । यो त आइज गोरु सिंङले हान भने जस्तै गरी बोलाउने हो भने गोरुले त हान्ने नै भयो नि । २० वर्ष वा ५० वर्षमा भयंकर बाढी आउने रिभर इकोलोजीमा मौसम परिवर्तन हुन्छ ।

अहिले सरकारले मान्छेहरूका घर भत्काइदिँदा मानिसहरूमा आक्रोश जाग्छ । विगतमा ठूलो चुक भएको कारणले नै अहिले यो समस्या आएको हो । ०४६ साल पछि बढेको राजनीतिक विसंगतिका कारण नै यो सबै भइरहेको छ । अब यसको निदान गर्न ठूलो परिभाषा चाहिन्छ । नदीको बहाव क्षेत्रलाई जब हामी रोकेर हेर्छौं, तब उसले असर गर्छ नै । नदीनाला धार्मिक हिसाबले मात्रै हैन, वातावरणीय हिसाबले पनि हाम्रो जीवनचक्रसँग जोडिएर आउँछ । त्यसलाई अतिक्रमण गरेपछि त यस्तो त भइहाल्छ ।

अहिले हाम्रो काठमाडौं उपत्यकाको सभ्यता, हाम्रो संस्कृतिलाई बिथोल्ने प्रयत्न भयो, जनतालाई सडकमा उतार्ने प्रयत्न भयो । हामी अदालत जान्छौं भनेर सरकारले भनिराख्या अवस्था छ । सभ्यता र संस्कृति एकताको कुरा गर्ने हैसियत नै यो सरकारले राख्दैन । यो त नौटंकी हो ।

किनकि बाटोघाटो बनाएको पनि सरकारले नै हो । नदी खोलामा बसोबास राखेको पनि सरकारले नै हो । अहिले २० मिटर छोडेर बनाउने सर्वोच्चले भनेको कुरा मान्यो भने त भोटर्स बैंकहरू त बन्द हुने भयो । त्यसबाट त्रसित भएर गरिएको हो । टुँडिखेल पहिला कत्रो थियो ? जमल देखि दशरथ रंगशालासम्म फैलिएको थियो । त्यो दशरथ रंगशाला त त्यहाँ बनाउने नै हैन । तर सरकार त्यहीँ खर्च गरिरहेको छ । पाटनको नगरपालिका पहिलाको ऐतिहासिक पोखरी भएको ठाउँमा बनेको छ । त्यस कारण आफैंले बिगार्ने काम गरेर अहिले यो नौटंकी गरिएको छ ।

सर्वोच्च अदालतबाट पनि यो हिसाब नभएर कम्तीमा वातावरणविद्हरूसँग छलफल गरेर गर्नुपर्नेमा न्यायाधीशलाई नै सबै ज्ञान हुने जसरी आदेश आयो । अहिले २० लाख बढी नागरिक प्रभावित हुने भए भनेर देखाइयो, त्यो के कारणले भयो भन्ने कारक तत्त्व पहिल्याएर भन्नु पऱ्यो । हामी फोक्सोबाट सास फेर्छौं भनेर कुरा गर्छौं तर हाम्रो फोक्सोको पनि फोक्सो हो यो खुलास्थल । त्यसमा नदीनाला, पोखरीहरू सबै आउँछन् ।

अहिले यो खुल्ला स्थान जोगाउनुपर्छ, नदीलाई नदीकै रूपमा बग्न दिनुपर्छ , संरचना त्यही अनुसारले बनाउनुपर्छ भनेर अगाडि बढिराखेका काठमाडौं महानगरका प्रमुख बालेन शाहको अभियान र दलका दन्तप्रसादका गतिविधि देखिएका छन् । नियत ठिक भए पनि बालेनको शैली ठिक देख्दिन । टुकुचा राजदरबारबाट सुरु भयो । तर समष्टिगत हिसाबमा नदीले कसरी काम गरिरहेको छ भनेर हेरेर गर्नुपर्छ ।

टुँडिखेल अगाडि बनेको आर्मीको विशाल हेडक्वार्टरदेखि भुइँचालोका बखतमा महसुस गरिएका सुधारका विषय छन् । बसपार्कमा अहिले भ्यूटावर बनाइएको छ । बसपार्क त्यो खुला स्थल हैन ? खै त्यसको बारेमा बोल्न सकेको ? त्यसैले उहाँको पनि नौटंकी छ । अहिले राजनीतिक हिसाबबाट बढी द्वन्द्व चाहिँ बालेन शाहसँगै गएर ठोकिएको हो कि जस्तो देखिराखेको छ । महानगरले नक्सा पास रोकिदियो । सरकार अहिले भ्याकेटमा जाने भयो । तर यहाँ एउटा घर जसको बाजे चोर, बाबु चोर र छोरो पनि चोर भयो भने त्यो घर कसरी ठिक हुन्छ ? त्यस्तै भइरहेको छ हाम्रो देशमा ।

अब यो पहिला हाम्रो काठमाडौँ उपत्यकाको सभ्यतासँग गएर हेर्ने हो भने नदीको किनारा र खुल्ला स्थानको अवस्था हेर्दा पञ्चतत्वको सिद्धान्त याद गर्नुपर्छ । हावालाई फोहर नगर्नु पाप लाग्छ । पानीलाई फोहोर नगर्नु पाप लाग्छ । मन्दिर भन्दा अग्लो घर नबनाउनु पाप लाग्छ ।त्यो पनि लाग्छ कि के गर्छ त थाहा भएन तर के भइरहेको छ त अहिले । पहिला जुन खुलास्थल गौचर थियो त्यो सरकारले बनाएको हैन, मान्छेले दान दिएर भएको थियो । सबैको लागि सानो गौचरमा कुनै धर्मको मात्रै जानु भन्ने थिएन । त्यसैले यो सबै कुरा जेलिएका छन् ।

अहिले सरकारले भ्याकेट गरेर ६ लाखलाई असर गर्छ भनेकोमा के कारणले तिनलाई असर होला ? त्यसको कारक तत्त्व के हो, कसरी सुरुवात भयो ? भनेर हेर्नुपऱ्यो । आफ्नो आँखा अगाडि खुलास्थल मिचिएकोमा बालेन शाहले पनि कहिले बोलेको सुनिँदैन । धेरै वर्ष अगाडि एउटा विद्वानले प्राकृतिक सौन्दर्य र संस्कृति व्याख्या गर्नु भएको छ । तर हामी नालायक भएर बिगाऱ्यौं । अहिले राम्रो शुद्ध मनले कोही पनि राम्रो गर्न भनेर लागेकै छैनन् । म त खुला ठाउँ चाहिन्छ भनेर धेरै पहिला देखि नै लेखिरहने, बोलिरहने मान्छे हुँ । मैले राजा वीरेन्द्रसँग टुँडिखेलको बारेमा बहस गरेको छु । अहिले इको सिटीहरू पश्चिमाको पछि लागेर भनिएका, गरिएका गैरचरित्रका कुरा हुन् ।

अब यो यथास्थितिमा सरकारले यो सर्वोच्चको फैसलालाई कार्यान्वयन गरिदियो भने त उपत्यका बाहिर नागरिकहरू जाने अथवा ल्यान्ड पुलिङ सिस्टमबाट व्यवस्थित गर्न सक्ने विकल्पहरू भन्ने हो भने ल्यान्ड पुलिङले सहरको विकास हुँदैन ।

(काठमाडौं उपत्यकामा चलिरहेको खुला स्थान मास्ने की जोगाउने भन्ने द्वन्दमा ठूला दलहरू किन मेयर बालेन शाहसँग ठोक्किइरहेका छन् ? यि नै विषयमा प्रा.डा. भरत शर्मा खुल्ला स्थान अध्ययत्ताले राखेको धारणाको सम्पादित अंश) खबरअबबाट

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमिTIMES

# जापानको आणविक त्रासदीबारेको फिल्म बन्दै




काठमाडौं । 'अवतार' र 'टाइटानिक' जस्तो सफल चलचित्र निर्देशन गरिसकेका जेम्स क्यामरुनले आणविक त्रासदीबाट बाँचेका जापानीको कथावस्तुमा कथानक चलचित्र 'लास्ट ट्रेन फ्रम हिरोसिमा' निर्देशन गर्ने भएका छन् । यसका लागि अस्कर विजेता फिल्ममेकरले चार्ल्स पेलेग्रिनोको आगामी पुस्तक 'घोस्ट्स अफ हिरोसिमा'को एडप्टेसन अधिकार खरिद गरेको डेडलाइनले जनाएको छ । उनी उक्त पुस्तकलाई फिचर फिल्ममा रुपान्तरण गर्न चाहन्छन् ।

समाचारअनुसार क्यामरुनले पेलेग्रिनाका दुई पुस्तक 'घोस्ट्स अफ हिरोसिमा' र 'लास्ट ट्रेन फ्रम हिरोसिमा'बाट कथावस्तु यसमा समेट्नेछन् । चौथो श्रृंखलासम्म बन्ने तयारीमा रहेका 'अवतार'मा काम सकेपछि उनी यो प्रोजेक्टमा जुट्नेछन् ।

दोस्रो विश्वयुद्धमा हिरोसिमा र नागासाकी दुवै थलोको आणविक बम विष्फोटबाट बाँचेका जापानी व्यक्तिको पीडादायी सत्यकथालाई फिल्मले पेश गर्नेछ । पेलेग्रिनोका पुस्तकले बाँचेकाहरुका अनुभव केलाउँछन् र सन् १९४५ अगस्टको उक्त विनाशकारी घटनाको पुरातात्विक अवलोकनको काम पनि गर्छन् । ती दुई थलोमा भएका आणविक बम विस्फोटमा डेढ लाखदेखि दुई लाख ४६ हजार मानिस मारिएको अनुमान गरिन्छ । सन् १९९७ मा रिलिज भएको 'टाइटानिक'पछि क्यामरुनले पहिलोपटक 'अवतार' बाहेकका फिल्ममा जुट्न लागेका हुन् ।

# नेपाल भाषाको अय्लाः अय्लाःको प्रिमियर




काठमाडौं । गोपाल कृष्ण महर्जनको स्वर रहेको नेपालभाषाको गीत 'अय्लाः अय्लाः' को म्यूजिक भिडियो प्रिमियरसहित सार्वजनिक भएको छ ।

शनिबार काठमाडौं सुन्धारास्थित सिटिसि मलमा रहेको सिडिसि सिनेमामा उक्त म्यूजिक भिडियो प्रिमियर गर्दै सार्वजनिक गरिएको हो ।

म्यूजिक भिडियो प्रिमियरको दौरान दर्शकदीर्घाको उपस्थिती निकै बाक्लो हुँदा फिचर फिल्मको जस्तै दुई शो प्रदर्शन गरिएको थियो ।

दर्शकहरुको प्रतिक्रियाबाट आफु निकै उत्साहित भएको निर्देशक सुरेन्द्र तुलाधरले बताए । 'राम्रो गीत बनोस् भनेर मिहिनेत गरेको थिएँ । दर्शकहरुको प्रीतिक्रया सुन्दा मिहिनेत सफल भएको अनुभव भयो' निर्देशक तुलाधरले भने । सृष्टि महर्जनसँगै चर्चित अभिनेता पल शाह अभिनित म्यूजिक भिडियो हेर्दा ठुलै बजेटमा निर्माण गरिएको अनुमान सहजै लगाउन सकिन्छ ।

'नेपालभाषाको गीत भन्ने वित्तिकै कम बजेट मात्र लगाउनु पर्छ भन्ने छ र ? बनाएपछि राम्रै बनाउनुपर्छ, राम्रो म्यूजिक भिडियो बनाउन बजेटमा कुनै सम्झौता गरेको छैन' निर्माता समेत रहेका गायक महर्जनले भने ।

गीतको छायाङ्कन कीर्तिपुर स्थित ससःत्वाः, ठमेलस्थितज्ञण्ह र टेकुस्थित बम्बीर शिवालय ट्रस्टमा गरिएको छ । गीतको परिकल्पना पनि निर्देशक तुलाधरकै रहेको छ । डान्स नम्बर गीतको कोरीयोग्राफी रोहिया महर्जनले गरेकी छिन् । सौरभ लामाको डिओपीमा इश्वर लाल सिंकेमनाले छायाङ्कन गरेका छन् । दृश्य सम्पादन सुजन बडालले गरेका छन् । शब्द रचना पवन जोशीको छ भने संगीत अनिल तुलाधरले दिएका छन् । सिडिसि सिनेमामा प्रिमियर गरिएसँगै यो म्यूजिक भिडियो ओएसआर डिजिटल युट्युब मार्फत सार्वजनिक भइसकेको छ ।

# पुराना फिल्म हेर्न हलमा भीड !



काठमाडौं जब २६ वर्षीया जाकिया रफीकीले २०१८ को बलिउड फिल्म 'लैला मजनु' थिएटरहरूमा पुनः रिलिज हुँदैछ भनेर सुने त्यसपछि उनलाई लाग्यो कि यो फिल्मलाई फेरि हेर्नुपर्छ । आफ्नी बहिनीसँग फिल्म हेर्न आएकी जाकिया रफिकी भन्छिन्, '२०१८ मा यो फिल्म हेर्न आएका थोरै मानिसमध्ये म पनि एक थिएँ । यसपालि धेरै जना आएका छन् । यो फिल्म हेर्दा धेरै मानिस हाँसे र रोएका थिए ।'

यो फिल्मसँग आफ्नो भावनात्मक सम्बन्ध रहेको उनी बताउँछिन् । यो फिल्ममा कश्मीरको प्रेमकथा छ, जुन उनको जन्मथलो पनि हो । उनी यसो पनि भन्छिन्, 'आफ्नो घरको एउटा ठूलो हिस्सालाई ठूलो पर्दामा हेर्न पाउनु रमाइलो अनुभव हो । जब उनी कश्मीरको सडकमा कारमा यात्रा गर्छिन्, तपाई त्यहाँ उपस्थित हुनुहुन्छ भन्ने महसुस गर्नुहुन्छ ।'

चर्चित फिल्ममेकर इम्तियाज अलीको फिल्म 'लैला मजनु'ले पहिलोपटकको रिलिजमा बक्स अफिसमा खासै केही गर्न सकेन तर पुनः रिलिज भएपछि भने फिल्मले राम्रो प्रदर्शन गरिरहेको छ ।

यो ती केही दर्जन भारतीय फिल्ममध्येको एक हो, जसको पुनः प्रदर्शनले दर्शकलाई ठूलो संख्यामा हलमा आकर्षित गरिरहेको छ । दुई दशकअघि रिलिज भएका केही फिल्म पुनः रिलिज हुँदैछन् । विश्वभरका अन्य सिनेमा उद्योग जस्तै भारतीय सिनेमा उद्योगले कोरोना अवधिदेखि धेरै उतारचढाव देखेको छ, जब थिएटर महिनौंसम्म बन्द थिए ।

बलिउड व्यापार विश्लेषक कोमल नाहटा भन्छन्, 'बलिउडका भर्खरै रिलिज भएका फिल्मका लागि यो वर्ष खासै राम्रो रहेन ।'

बलिउडको दबदबा रहेको भारतीय फिल्म उद्योगका धेरै भन्दा धेरै फिल्म हलमा रिलिज भइरहेका भए पनि अहिले मानिसले थिएटरमा जानुको सट्टा फिल्मलाई नेटफ्लिक्स वा अमेजन प्राइम जस्ता स्ट्रिमिङ प्लाटफर्ममा पर्खन र हेर्न जान रुचाउन जाने गरेको देखिन्छ । कतिपय फिल्मले यो प्रवृत्ति तोडेका छन् । हालै रिलिज भएको हरर कमेडी फिल्म 'स्त्री २' ले भारतमा ४०० करोड भारुभन्दा बढी कमाइ गरिसकेको छ । यो फिल्म यस वर्षको अहिलेसम्मकै सबैभन्दा ठूलो हिट फिल्म बनेको छ ।

कमाइको कुरा गर्ने हो भने यो पान-इन्डिया फिल्म 'कल्की' भन्दा पछाडि छ । 'कल्की' भारतका केही ठूला स्टारले अभिनय गरेको फिल्म हो । तर 'स्त्री २' उद्योगका केही अपवादमध्येको एक हो, किनभने यसअघि धेरै दिग्गज स्टारका फिल्म पनि नराम्ररी फ्लप भइसकेका छन् ।

दर्शकको हेर्ने बानी परिवर्तन भइरहेकाले भारतको फिल्म उद्योगले निरन्तर परिवर्तनको सामना गरिरहेको छ भन्ने कुरामा कुनै शंका छैन । यस वर्षका शीर्ष १० फिल्ममध्ये तीनवटा केरला राज्यका छन्, जहाँका फिल्मको बजेट तुलनात्मक रूपमा कम छ ।

फिल्म वितरक र दर्शक दुवैले आ-आफ्नो सुविधा अनुसार पुराना फिल्मतिर लाग्नु अचम्मको विषय होइन । पुनः रिलिज भएका फिल्मको लिस्ट हेर्नुभयो भने यसको पछाडिको सूत्र बुझ्न गाह्रो हुनेछ ।

पुनः रिलिज भएका फिल्म विभिन्न विधाका छन् । 'दिलवाले दुल्हनिया ले जायेंगे' र 'हम आपके हैं कौन' जस्ता रोमान्टिक फिल्म होस् वा 'मैं खिलाडी तू अनारी' र 'बाजीगर' जस्ता सन् १९९० को मनपर्ने एक्सन थ्रिलर फिल्म हुन्, उनीहरूले फेरि एकपटक दर्शकको माया पाइरहेका छन् ।

'लैला मजनु'को सफलताले विश्लेषक सबैभन्दा अचम्ममा परेका छन् । फिल्म निर्माता भन्छन् उनीहरू विशेष गरी कश्मीरका दर्शकले फिल्म हेर्न पाएकोमा खुसी छन्, किनभने त्यहाँ दुई दशकपछि सन् २०२२ मा थिएटरलाई पुनः खोल्ने तयारी गरिएको छ ।

कोमल नाहटा भन्छन्, 'यो फिल्मले अहिले कम्तीमा घाटा कम गर्न सफल भएको छ । यस सफलताले अन्य यस्ता फिल्मलाई पुनः रिलिज गर्न प्रेरित गर्नेछ ।'

बलिउड विश्लेषक तरण आदर्श भन्छन्, 'यी रिलिज फिल्मले नयाँ फिल्मको अभाव र बक्स अफिसको लुकेको चमकलाई पूरा गरिरहेका छन् ।'

तिनीहरूको पुनः रिलिजको लागि खासै प्रचारप्रसार पनि गर्नुपर्दैन । तिनीहरूको पोस्टर सामाजिक सञ्जाल र टिकट बुकिङ साइटहरूमा मात्र देखिन्छन् । तरण आदर्श भन्छन्, 'यो पूरा नोस्टाल्जियामाथि निर्भर गर्छ । साथै, फिल्मप्रति दर्शकको प्रेमलाई पनि दर्शाउँछ ।'

तमिल र तेलुगु उद्योगमा पुनः रिलिजको पछाडि मुख्य कारक यहाँका स्टार हुन् । हालै केही भिडियो सार्वजनिक भएका छन्, जसमा तेलुगु सुपरस्टार चिरञ्जीवीका फ्यान उनको सन् २००२ को हिट फिल्म 'इन्द्रा' को एउटा गीतमा नाचिरहेको देखिन्छ ।

पवन कल्याणको २०१२ मा आएको फिल्म 'गब्बर सिंह' अर्को हप्ता रिलिजको लागि तयार छ । जब तमिल अभिनेता विजयको २००४ को फिल्म 'घिल्ली' अप्रिलमा पुनः रिलिज भयो, दर्शक ठूलो संख्यामा हलमा भेला भए ।

दक्षिणी फिल्म उद्योग विश्लेषक श्रीधर पिल्लई भन्छन्, 'यी प्रायः २० वर्षअघिका ठूला हिट फिल्म हुन् । यी फिल्म र यी स्टारहरूप्रति दर्शकको माया नै उनीहरूको पुनः रिलिजको मुख्य कारण हो ।'

मलयालम सुपरस्टार मोहनलालका त्यस्ता दुई फिल्म सन् २००० को देवदूतन र १९९३ को मणिचित्रथाझु केरलाको थिएटरमा फेरि फर्किएका छन् ।

पहिलो रिलिजमा फ्लप भएको फिल्म 'देवदूत' अहिले एक महिनादेखि हलमा चलिरहेको छ । पिल्लई भन्छन्, 'मणिचित्रथाझ' जसले आफ्नो पहिलो रिलिजमा बक्स अफिसका सबै रेकर्ड तोड्यो, सम्भवतः दक्षिणी भारतमा पुनः रिलिज भएका फिल्ममध्ये सबैभन्दा ठूलो हिट हो ।'

उनी अगाडि भन्छन्, 'यो फिल्म रिलिज हुँदा ब्लकबस्टर थियो र यसलाई युवा दर्शकको साथ पनि मिलिरहेको छ ।' कहिलेकाहीं फिल्मको सिक्वेल बन्ने सम्भावनाले त्यो फिल्मप्रति दर्शकको चासो फेरि बढ्छ । सन् २००१ मा रिलिज भएको फिल्म 'गदर एक प्रेम कथा'ले गत वर्षको सिक्वेल 'गदर २' हिट भएपछि हलमा पुनः दर्शकको माया पाएको नाहटा बताउँछन् ।

कोमल थप भन्छन्, 'कमल हसनको इन्डियनले पुनः रिलिजमा उस्तै सफलता पाएन किनभने यसको सिक्वेल 'इण्डियन २' ले बक्स अफिसमा राम्रो प्रदर्शन गर्न सकेन ।

आदर्श भन्छन्, 'थिएटरमा फिल्म हेर्ने अनुभव अनलाइनमा हेर्नेभन्दा धेरै फरक हुन्छ र यही कारणले दर्शकलाई थिएटरतर्फ तानेको छ ।' श्रुति जेन्डे यसमा सहमत छन् । पुणेकी ३० वर्षीया श्रुतिले गत वर्षदेखि यस्ता धेरै फिल्म हेरिसकेकी छिन् । 'कथाका लागि फिल्म हेर्नुको सट्टा सामूहिक अनुभव बन्छ, जनतालाई अब के हुने हो भन्ने थाहा हुन्छ र संवाद वा दृश्य अगाडि नै त्यही अनुसार प्रतिक्रिया दिन्छन्,' उनी भन्छिन् ।

बीबीसीबाट



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



थिमि टाइम्स
THIMI TIMES WEEKLY
साप्ताहिक




वर्ष १८ | अङ्क ११ | ने.सं. ११४४ | असोज ०९ गते बुधबार, २०८१ | 25 Sept. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

# सहकारी रकम दुरुपयोगमा राज्य संयन्त्रको साथ




काठमाडौं । सहकारीमा राज्य संयन्त्रकै लापरबाही र सरकारको उदासीनताले नै संकट गहिरिएको पाइएको छ। सहकारी क्षेत्रमा समस्या देखिएपछि २०६१ सालयता समाधानका लागि पटक-पटक अध्ययन भए पनि त्यसको कार्यान्वयन नहुने प्रवृत्ति सहकारी समस्याको जडका रूपमा देखिएको हो । सहकारीका मूल्य, मान्यता र सिद्धान्त बमोजिम सहकारी व्यवसाय सदस्यद्वारा स्थापित, सञ्चालित र नियन्त्रित रहनुपर्नेमा अधिकांश सहकारी स्वनियमनमा सञ्चालन हुन नसक्नु नै सहकारी संस्थाको आधारभूत चुनौती देखिएको हो । प्रतिनिधिसभाले गठन गरेको सहकारी संस्था बचत रकम दुरुपयोग सम्बन्धमा संसदीय छानबिन विशेष समितिले त्यसलाई सहकारी समस्याको कारणका रूपमा औंल्याएको हो ।

'साधारणसभा नगर्ने वा गरे पनि कानुनले निर्धारण गरेको विधि र प्रक्रिया बमोजिम नगर्ने, लेखा सुपरीवेक्षण समितिको निष्क्रियता, आन्तरिक नीति तथा विधि एवं कार्यविधि अभाव, सीमित सञ्चालकले संस्थाको स्रोत आफुखुसी निजी व्यवसाय र स्वार्थमा उपयोग गर्ने प्रवृत्ति, कर्मचारीलाई नियुक्तिपत्र नदिई काममा लगाउने, कमजोर आन्तरिक नियन्त्रण प्रणाली सहकारी समस्याका कारण हुन्,' प्रतिवेदनमा उल्लेख छ ।

वित्तीय कारोबार गर्ने कुनै पनि प्रकृतिको संस्थामा सरकारी संयन्त्र नियामक तथा सुपरीवेक्षक बन्न नसक्ने अवस्था विगतदेखि नै अनुभूत हुँदै आएका संसदीय छानबिन विशेष समितिको निष्कर्ष छ । 'सहकारी विभाग वा प्रादेशिक रजिस्ट्रार कार्यालय वा स्थानीय तहबाट सहकारीको प्रभावकारी नियमन सुपरीवेक्षण हुने मोहबाट पनि मुक्त हुन आवश्यक छ । सहकारी क्षेत्रमा जटिलता र संकट आउनुमा नियामकीय कमजोरी प्रमुख जिम्मेवार रहेको देखिन्छ,' समितिको प्रतिवेदनमा छ ।

दुई दशकभन्दा लामो अवधिदेखि सहकारी क्षेत्रमा देखिएको समस्या सुधार हुनुभन्दा विकराल बन्दै गएको छ । दुई दशकमा सहकारी समस्या समाधान गर्ने भन्दै करिब नौ वटा अध्ययन समिति बने । तिनका प्रतिवेदन आए । तर, त्यसलाई दराजमा थन्क्याउने काम मात्रै भयो । यतिमात्र नभई नेपाल राष्ट्र बैंकबाट कर्मचारी बोलाएर सहकारी विभागले केही प्रतिनिधिमूलक सहकारी संस्थामा अनुगमन गर्‍यो । त्यसलाई पनि कार्यान्वयन गर्नेभन्दा सहकारी विभागको नेतृत्वले समस्या देखिएको सहकारीलाई थप प्रोत्साहन गर्ने नीति लिएको देखिन्छ । '२०६० को दशक सुरुवातबाटै सहकारीमा बढेको अपारदर्शिता, सहकारी मूल्य, मान्यता एवं सिद्धान्तमा विचलन र वित्तीय सुशासन अभावजस्ता कारण कतिपयमा जटिलता देखापर्न थालेपछि सरकारले केही सहकारी अनुगमन गर्न राष्ट्र बैंकको सहयोग मागेको देखिन्छ,' संसदीय छानबिन विशेष समितिको प्रतिवेदनमा छ, 'सहकारी विभाग र राष्ट्र बैंकको संयुक्त टोलीले २०६६ माघदेखि २०६९ कात्तिकसम्म १ सय ३५ सहकारी संस्थाको स्थलगत निरीक्षण गरेको थियो । सहकारी क्षेत्रका समस्या बढ्दै गएको अवस्थामा राष्ट्र बैंकको सहभागितामा भएको स्थलगत निरीक्षणलाई सकारात्मक रूपमा लिए पनि निरीक्षणमा जनाइएको कैफियत बमोजिम सुधार र कार्यान्वयन गर्नेतर्फ सहकारी विभागले प्रभावकारिता ल्याउन सकेन ।' त्यतिमात्रै नभई सहकारी विभागकै रजिस्ट्रारहरू सहकारीको खर्चमा विदेश भ्रमण गर्ने गरेको तथ्य समितिले आफ्नो प्रतिवेदनमा उल्लेख गरेको छ ।

'नेपाल राष्ट्र बैंकले २०७९ माघमा राष्ट्रिय सहकारी बैंकमा गरेको अनुगमनमा दिएको

बाँकी पेज ७ मा

# मध्यपुर थिमिमा ५ हजार मिटर सडक कालोपत्रे र ढलान सम्पन्न




भक्तपुर । मध्यपुर थिमि नगरपालिकाले गत आ.व. २०८०/०८१ मा पूर्वाधार विकासतर्फ ५ हजार १५९ मिटर सडक कालोपत्रे र ढलान भएको छ । नगरपालिकाको शनिवार आयोजना गरेको वार्षिक समिक्षा कार्यक्रममा सो बारे जानकारी दिईएको हो । यसैगरी नगरपालिकाले गतवर्ष एक हजार ५०२ मिटर ढुंगा छपाई, २ हजार ५० मिटर सडक ग्राभेल, ब्लक छपाई १९६ मिटर, बाटो सिमांकन ४५ स्थानमा र ५ स्थानमा कल ५ रोपनी ८ आना पर्ती जग्गा संरक्षण गरेको जनाएको छ ।

खानेपानी तथा सरसफाईतर्फ पाइप लाइन बिस्तार गरी थप २६५ घरधुरीमा पानी वितरण गरिएको छ । सार्वजनिक शौचालय दुई वटा निर्माण गर्नुका साथै २ हजार ९३० मिटर ढल बिस्तार गरिएको छ । सार्वजनिक भवनतर्फ १५ वटा सामुदायिक भवन, १३ वटा पार्क, ४ वटा ज्येष्ठ नागरिक भवन, बस बिसौनी २, सत्तल/पाटी २, केन्द्रीकृत भान्छाघर एक वटा निर्माण गरिएको छ ।

यसैगरी पर्यटन, साँस्कृतिक, ऐतिहासिक एवम् धार्मिक महत्वका सम्पदाहरु मध्ये ५ वटा धार्मिक स्मारक र पुरातात्विकको जिर्णोद्धार गरिएको छ भने ११ वटा पाटी, ४ वटा पोखरी, एउटा हिटी, ४ वटा मन्दिर, २ वटा इनार, बिस्का: जात्रामा जात्रा गर्ने विभिन्न देवी देवताका ४ वटा खट, २ वटा विहार, मसानघाट एउटा र क्रियापुत्री भवन एक वटा निर्माण गरिएको छ ।

सार्वजनिक पूर्वाधार भवनतर्फ विद्यालय भवन २ वटा, स्वास्थ्य चौकी एउटा, शिशुस्हार केन्द्र एउटा, खेलकद मैदान एउटा, मनोरञ्जन पार्क २ वटा निर्माण गरेको नगरपालिकाका योजना महाशाखा प्रमुख सत्यनारायण साहले जानकारी दिए ।

यसैगरी मध्यपुर थिमि नगरपालिकामा गत आर्थिक वर्ष ४१८ वटा घर नक्सा दर्ता भएका छन भने डिपिसीसम्म ३१५ वटा र डिपिसी भन्दा माथि निर्माणका लागि ३८९ वटालाई स्विकृती दिएको छ । घरनक्सा नामसारीका लागि १६४ वटा आवेदन परेकोमा १६३ वटा फर्स्यौट गरिएको छ । घर निर्माण सम्पन्न प्रमाणपत्रका लागि ५०२ वटा निवेदन दर्ता भएकोमा ४३४ वटा स्विकृत गरिएको छ ।

बाँकी पेज ७ मा

# शिक्षा, स्वास्थ तथा सूचना प्रविधि समितिका माननीयहरू भक्तपुर निरिक्षणमा !



भक्तपुर । प्रतिनिधिसभाअन्तर्गत शिक्षा, स्वास्थ्य तथा सूचना प्रविधि समितिका सभापति मा. अम्मरबहादुर थापाको नेतृत्वमा समितिका माननीयहरूद्वारा भक्तपुर नगरपालिकाद्वारा सञ्चालित शैक्षिक संस्थाहरु र भक्तपुर नगरपालिका वडा नं. १ सल्लाघारीस्थित १०८ रोपनी जग्गाको स्थलगत निरीक्षण गरेका छन् ।

भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले सभापति मा. थापा सहितको टोलीलाई सल्लाघारीमा स्वागत गरेको थियो । भक्तपुर नगरपालिकाले ख्वप विश्वविद्यालय संचालनको लागि उक्त जग्गा माग गर्दै आएको सन्दर्भमा त्यहाँको वस्तुस्थिति बुझ्न प्रतिनिधिसभा शिक्षा, स्वास्थ्य तथा सूचना प्रविधि समितिका माननीयहरू भक्तपुर भ्रमणमा आएको हो । टोलीले १०८ रोपनी जग्गा र जग्गासँगैको हनुमन्ते खोला करिडोरको पनि निरीक्षण गरेको थियो ।

सल्लाघारीमा भएको निरीक्षणपश्चात टोलीलाई नगरपालिकाले गरेको स्वागत र

बाँकी पेज ७ मा



# सहकारी प्रकरणले कता जाला रविको राजनीति ?

डार्कमान राई

काठमाडौं । राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा)का सभापति रवि लामिछानेमाथि अहिले अर्को सङ्कट आइलागेको छ । नागरिकता प्रकरणमा दोषी ठहर भएपछि गुमेको सबै पदमा पुनर्वहाली भएको डेढ वर्षमै उनी सहकारी प्रकरणमा पक्राउ पर्ने अवस्था छ ।

सहकारीको रकम अपचलनबारे छानविन गर्न बनेको संसदीय विशेष समितिले आफूसँगै कारबाहीका लागि सिफारिस गरेको छविलाल जोशी पक्राउ परेपछि रवि त्रसित र आक्रोशित छन् ।

कांग्रेसको जोडबलमा गठित छानविन समितिको प्रतिवेदन कार्यान्वयनका लागि मन्त्रिपरिषद्बाट गृह मन्त्रालय हुँदै प्रहरीसम्म पुगेपछि जोशीलाई प्रहरी आइतबार नै पक्राउ गरी पोखरा पुर्‍याएको छ ।

सहकारी बचत रकम दुरुपयोग गर्ने गोरखा मिडिया प्रालिमा कुनै बेला सँगै रहेका सारथि पक्राउ परेपछि आफू पनि पक्राउ पर्ने भय रविमा छ । उनी पक्राउ पर्ने हल्लापछि आइतबार रातिसम्म पार्टी मुख्यालय वनस्थलीमा रास्वपाका कार्यकर्ताको भिड लागेको थियो सभापतिसँगै काठमाडौंमा उपलब्ध रास्वपा सांसद र नेताहरू पनि कार्यालयमै अबेरसम्म बसे ।

राति नै कार्यालयमा उपस्थित कार्यकर्तालाई सम्बोधन गर्दै रविले आफूमाथि षड्यन्त्र गरिएको दाबी गरे । 'कसैको राजनीति जोगाउनका निम्ति मलाई बलि चढाउन नखोज्नुस् । आँट भए आउनुस्, तर मलाई षड्यन्त्र गरेर होइन । चुनाव लडेर जित्नुस् । यस्तो षड्यन्त्र गरेर होइन', उनको भनाइ छ, 'सबैलाई हेक्का रहोस् कि रवि लामिछाने मान्छे बेचेर राजनीतिमा आएको होइन, बेचिएका मान्छेलाई बचाएर राजनीतिमा आएको हो ।'

आफू निर्दोष रहेको जिकिर गर्दै रविले के का आधारमा आफूलाई पक्राउ गर्न खोजियो ? भनेर आक्रोश पोखे । 'प्रहरीको अनुसन्धानले दोषी देखिएको छैन भन्छ, अदालतमा मुद्दा गएको छ प्रतिवादी छैन भन्छ, कसैको बयानले बोलेको छैन, देशको प्रहरी प्रमुखले संसदीय समितिमा गएर भन्छन् संलग्नता छैन भन्छन् । सहकारी समितिले पनि सहकारीको रकम ल्याएकोबारे केही निर्णय गरेको छैन भन्छ', उनले भने, 'तर कुन नयाँ तथ्य आयो र यसरी गर्न खोजियो ?'

यद्यपि, उनले आफू नभागेको भन्दै थप छानविनका लागि सघाउन तयार रहेको बताएका छन् । 'मैले हिजो पनि भनेको थिएँ । मलाई कहाँ लानुहुन्छ लैजानुहोस् म जान

बाँकी पेज २ मा

## सहकारी......

तयार छु छानविनका लागि सघाउन', उनले भने, 'म भागेको छैन । गल्ती गर्ने भागेका छन् । तर सरकारको यो कदममा शंका छ । अन्याय गर्न पाइँदैन ।'

त्यसपछि पार्टी कार्यालयबाट निस्किएका रास्वपा सभापतिले मध्यराति सामाजिक संजालमार्फत प्रधानमन्त्री केपी शर्मा ओलीलाई आँखा नसन्काउन चेतावनी दिए । राष्ट्रसंघको महासभामा भाग लिन न्युयोर्क पुगेका प्रधानमन्त्रीलाई उनले सहकारी पीडितलाई न्याय दिने भए बसेर कुरा गर्न आग्रह पनि गरेका छन् ।

'न्युयोर्कबाट आँखा नसन्काउनुस् प्रधानमन्त्रीज्यू, फर्केर आउनुस्, बसेर कुरा गरौँ,' उनले लेखेका छन्, 'सहकारी पीडितलाई न्याय दिने नियत भए म रुम मिलाउँछु, बिचौलियाको घर चाहिन्न ।' प्रहरीले पक्राउ गर्ने तयारी गरेसँगै रास्वपा सभापति रविमाथि संकट चुलिएको छ । विगतमा पनि विभन्न प्रकरणमा जोडिँदै आएका रवि पुनः सहकारी प्रकरणमा मुछिएपछि उनको राजनीतिक भविष्य नै अन्योलतर्फ धकेलिन सक्ने विश्लेषण भइरहेका छन् ।

गत आमनिर्वाचनबाट देशको चौथो ठूलो दलका रूपमा उदाउँदै गर्दा रास्वपालाई प्रमुख तथा पुराना दलहरूका चुनौतीका रुपमा अर्थ्याइन्थ्यो । तर संसद यात्राको दुई वर्ष नबित्दै एकपछि अर्को विवादमा मुछिनुले स्वयं सभापति रवि र उनका पार्टी रास्वपाकै भविष्य अन्योलग्रस्त हुन सक्ने धेरैको बुझाइ छ ।

सञ्चारकर्म छाडेर राजनीतिमा हामफालेदेखि नै रास्वपा सभापति रवि विवादमा तानिँदै आएका छन् । गत आमनिर्वाचनमा चितवन २ बाट प्रतिनिधिसभा सदस्य निर्वाचित भएका उनी उपप्रधान एवं गृहमन्त्री बने ।

तर, नागरिकताको वैधता विवादमा सर्वोच्च अदालतबाट उनी दोषी ठहर भए । त्यसपछि गृहमन्त्री मात्र नभई रास्वपाकै सभापति पदसमेत गुमाउनुपर्‍यो । अर्को वैधानिक नागरिकता लिएका रविले १० वैशाख ०८० मा भएको उपनिर्वाचनमा चितवन २ बाटै पुनः निर्वाचित भए । त्यसपछि सरकारलाई समर्थन र विश्वास कायम राख्ने शर्तमा राहदानी अपचलनमा मुद्दा नचल्ने निर्णय गराएको आरोप खेपे । राहदानी विवादको मुद्दा अहिले पनि सल्टिएको छैन ।

ढाकाकुमार श्रेष्ठले मेडिकल व्यवसायी दुर्गा प्रसाईसँग साढे २ करोड मागेको अडियोले पनि रास्वपा बदनाम बन्यो । उक्त प्रकरणमा श्रेष्ठले रविको कोर टिमका सदस्यले पैसा मागेको दाबी गरेका थिए । कोर टिममा रवि, उनकी श्रीमती निकिता पौडेल, उपसभापति डिपी अर्याल र केन्द्रीय सदस्य दीपक बोहोरा रहेको बताइन्छ, यद्यपि यसबारे आधिकारिक कुरा बाहिर आएको छैन ।

गृहमन्त्री रहँदा पनि रविले सहकारी ठगीका सन्दर्भमा सरकारी निकाय र प्रहरीलाई समेत आफ्नो स्वार्थअनुकूल प्रयोग गरेको आरोप छ । कतै पनि उनीविरुद्ध उजुरी नपरेको भन्दै महान्यायाधिवक्ताको कार्यालयले गत २४ वैशाखमा दिएको पत्रविरुद्ध सर्वोच्चमा रिट परेको थियो भने त्यसमा न्यायाधीशहरूकै राय बाझियो । सञ्चारकर्ममा हुँदै पनि लामिछाने विवादमा नपरेका होइनन् । न्युज २४ टेलिभिजनमा कार्यरत रहेका बेला उनीमाथि आत्महत्या दुरुत्साहनको मुद्दा चल्यो ।

सहकर्मी सालिकराम पुडासैनीले भरतपुरमा झुन्डिएर आत्महत्या गर्नुअघि भिडियो रेकर्डमा आफूलाई लामिछानेको समूहले पैसा बार्गेनिङ गर्न पठाएको तर आफूले नसकेपछि आत्महत्या गर्ने बाटो लिनुपरेको उल्लेख गरेका थिए । तर, त्यो मुद्दामा भने लामिछानेले सफाइ पाएका छन् ।

'रवि र रास्वपाको भविष्यबारे केही भन्न सकिन्न'

यी एकपछि अर्को विवादका कारण रविको राजनीति र रास्वपाको भविष्य संकटउन्मुख रहेको धेरैको बुझाइ छ । राजनीतिशास्त्री डा.लोकराज बराल कमजोर पृष्ठभूमि, अस्पष्ट सिद्धान्त र निष्ठाको कमीले रवि र रास्वपाको भविष्यबारे केही भन्न नसकिने बताउँछन् ।

'रवि जीले संचारकर्मबाट कमाएको पपुलारिटीको भरमा चुनाव जित्नभयो । अर्को कुरा जनताले वस्तुगत र तथ्यगत आधारमा नभई इमोसनमा भोट दिने, वाहवाही गर्ने चलन छ । पुराना पार्टीप्रतिको रिसको प्रतिक्रिया पनि थियो', उनले भने, 'तर पहिल्यै देखिको पृष्ठभूमि, गतिविधि र बोलिवचनलाई हेर्दा उहाँको विश्वाससिलो रुपमा बाहिर आउनुभएको छैन । राजननीतिक पृष्ठभूमि, सिद्धान्त र निष्ठा स्थापित छैन । साह्रै अपरिपक्वता देखियो । उहाँ चाँडै खुइलिने बाटोमा जानुभयो । यसले गर्दा उहाँको पार्टीलाई जनतासामु टिक्न गाह्रो देखिन्छ । पार्टीको भविष्यबारे केही भन्न सकिने अवस्था रहेन ।'

अर्का विश्लेषक देवेश झा पनि उदाउँदो राजनीतिक दलको नेतृत्व एकपछि अर्को विवादमा तानिनु शुभ संकेत नभएको बताउँछन् । 'उहाँ (रवि) वान नाइट स्टारका रुपमा उदाउनुभयो । उहाँको पार्टी रास्वपालाई पहिलो निर्वाचनमै अपेक्षाभन्दा ठूलो सफलता हासिल भयो । उदय जे जसरी उदय भए पनि जनताले एउटा अपेक्षा गरेका पक्कै थिए', उनी भन्छन्, 'तर पछिल्लो समय जे जस्ता विवादमा उहाँ फस्दै आउनुभएको छ, यो पक्कै पनि एउटा राजनीतिक नेतृत्वका लागि राम्रो होइन । राजनीतिक व्यक्ति जो कसैका लागि यसरी विवादित हुन राम्रो होइन ।'

न्यायिक प्रक्रियामा प्रवेश गरेको अहिलेको सहकारी प्रकरणलाई राजनीतिसँग जोड्नुले पनि रास्वपालाई दूरगामी प्रभाव पार्ने विश्लेषक झाको बुझाइ छ । उनी भन्छन्, 'अहिले न्यायिक प्रक्रियामा प्रवेश गरेको सहकारीको विषयमा रविजीले आक्रोशमिश्रित अभिव्यक्तिहरू दिँदै हुनुहुन्छ । हिजो राति मात्र उहाँले प्रधानमन्त्रीलक्षित अभिव्यक्ति दिनुभयो । न्यायिक प्रक्रियामा गइसकेको विषयलाई यसरी राजनीतिकरण गर्नु एउटा स्टन्ट त हुनसक्छ, तर त्यसले दूरगामी रूपमा राम्रो प्रभाव पार्दैन ।'

रास्वपा सभापति रवि साँच्चिकै निर्दोष भए अहिले सहकारी प्रकरण जनतासामु निष्कलंक सावित हुने ठूलो अवसर भएको विश्लेषक झा बताउँछन् । 'अब विवादमा मुछिएपछि त्यसलाई फेस गरेर, न्याय निरूपणको विषयलाई सहज ढंगले स्वीकारेर साँच्चिकै उहाँलाई फसाउन खोजिएको हो भने आफूलाई स्वच्छ र निष्कलंक प्रमाणित गर्ने अवसर हो रविजीका लागि त । जसले उहाँको व्यक्तित्व उँचो हुन् भने पार्टीमा आकर्षण पनि बढ्छ ।' थाहाखबर

# लेबनानमा एकै पटक १००० पेजरहरू विस्फोट !



एजेन्सी । लेबनानमा भएको पेजर विष्फोटमा कम्तीमा नौ जनाको मृत्यु भएको छ भने करिब ३ हजार घाइते भएका छन् । लेबनानको स्वास्थ्य मन्त्रालयका अनुसार घाइतेमध्ये २ सयभन्दा बढीको अवस्था गम्भीर रहेको छ । लेबनानको चरमपन्थी संगठन हिजबुल्लाहले पेजर विस्फोटको लागि इजरायललाई जिम्मेवार ठहर गर्दै उचित सजाय दिने बताएको छ । यद्यपी इजरायलको तर्फबाट यस घटनाबारे कुनै प्रतिक्रिया आएको छैन ।

लेबनानको सरकारी एजेन्सीका अनुसार राजधानी बेरुतदेखि बाका उपत्यकासम्मका क्षेत्रमा विस्फोट भएको हो । हिज्बुल्लाहका धेरै शीर्ष नेताहरू मारिने वा घाइते भएको डर छ । आखिर, पेजर भनेको के हो, एकैपटक १००० भन्दा बढी पेजर कसरी विस्फोट भयो ?

विस्फोट भएको पेजर के हो?

पेजर एउटा सानो सञ्चार यन्त्र हो, जुन सन्देश पठाउन प्रयोग गरिन्छ । ८० को दशकसम्म यो संसारभर व्यापक रूपमा प्रयोग भएको थियो । तर, मोबाइल र अन्य प्रविधिको आगमनसँगै पेजर लगभग हराएको थियो । तर धेरै आतंककारी संगठनहरू र हिजबुल्लाह जस्ता अपराधीहरूले अझै पनि पेजरहरू प्रयोग गर्छन् । किनभने यो मोबाइल वा अन्य सञ्चार उपकरणहरू भन्दा धेरै सुरक्षित मानिन्छ र सजिलै कब्जा गर्न सकिँदैन । पेजर रेडियो तरंगहरु मार्फत काम गर्दछ । अपरेटरले कुनै पनि रेडियो फ्रिक्वेन्सीमा पेजरबाट सन्देशहरू पठाउन सक्छ ।

पेजर कसरी काम गर्छ ?

सरल भाषामा, यदि तपाइँ पेजर मार्फत कसैलाई सन्देश पठाउन चाहनुहुन्छ भने, पहिले तपाइँको उपकरणमा रिसिभरको रेडियो फ्रिक्वेन्सी सेट गर्नुपर्छ र त्यसपछि तपाइँ सन्देश पठाउन सक्नुहुन्छ । सन्देश उही अद्वितीय आवृत्तिमा प्राप्त हुनेछ । पेजरमा फोन गर्ने आदि सुविधा छैन । पेजरहरू मुख्यतया तीन प्रकारका हुन्छन् । पहिलो एक तरिका पेजर हो, जसमा केवल सन्देशहरू प्राप्त गर्न सकिन्छ । दोस्रो दुईतर्फी पेजर हो, जसमा सन्देशहरू पठाउन र प्राप्त गर्ने सुविधा छ र तेस्रो भ्वाइस पेजर हो जसमा भ्वाइस रेकर्ड गरिएका सन्देशहरू पठाउन सकिन्छ ।

मोबाइल फोन र अन्य प्रविधिहरूको तुलनामा पेजरहरू धेरै सुरक्षित मानिन्छन् । विज्ञहरूका अनुसार पेजरमा धेरै आधारभूत प्रविधिको प्रयोग गरिन्छ र त्यहाँ धेरै भौतिक हार्डवेयर रहेकाले यसलाई निगरानी गर्न गाह्रो हुन्छ । पेजरबाट पठाइएका सन्देशहरू पनि ट्र्याक गर्न गाह्रो छ, त्यसैले हिजबुल्लाह जस्ता संगठनहरूले आफ्नो सुरक्षालाई ध्यानमा राखेर यसलाई प्रयोग गर्छन् ।

आखिर, पेजर कसरी विस्फोट भयो?

पहिलो सिद्धान्तः १००० भन्दा बढी पेजरहरू कसरी एक साथ विस्फोट भयो ? यसका पछाडि विभिन्न सिद्धान्तहरू देखा परिरहेका छन् । पहिलो सिद्धान्त यो हो कि रेडियो फ्रिक्वेन्सी जसमा हिज्बुल्लाहका पेजरहरूले काम गरिरहेका थिए ती ह्याक गरिएको हुन सक्छ र संकेतहरू प्रि-डक्टेड पेजरहरूलाई विस्फोट गर्न प्रयोग गरिएको थियो । डाटा विश्लेषक राल्फ बेडनले अल जजीरालाई पेजरमा लिथियम ब्याट्री रहेको बताए । यदि पेजर ह्याक भयो भने, यसको ब्याट्री धेरै तातो हुन सक्छ, त्यसपछि एक प्रक्रिया सुरु हुन्छ जसलाई 'थर्मल रनअवे' प्रक्रिया भनिन्छ ।

यस प्रक्रियामा, एक रासायनिक श्रृंखला प्रतिक्रिया हुन्छ र अचानक ब्याट्रीको तापक्रम यति बढ्छ कि यसले ठूलो विस्फोट गराउन सक्छ । यद्यपि, राल्फ भन्छन् कि एकै साथ धेरै पेजरहरू विस्फोट गर्न सम्भव छैन । यसका लागि, पेजरमा पहिले नै बग हुनुपर्दछ र हिजबुल्लाह लडाकुहरूले प्रयोग गरेको पेजरमा पहिले नै बग राखेको प्रबल सम्भावना छ ।

दोस्रो सिद्धान्तः पेजर ब्लास्ट पछि अर्को सिद्धान्त पनि उभरिरहेको छ । न्युयोर्क टाइम्सको रिपोर्टका अनुसार हिजबुल्लाहले केही महिना अघि एक ताइवानी कम्पनी गोल्ड अपोलोबाट करिब ५ हजार पेजर अर्डर गरेको थियो । इजरायली खुफिया एजेन्सी मोसादले यसबारे थाहा पाएको थियो र त्यही क्रममा मोसादले पेजरमा करिब तीन ग्राम विस्फोटक राखेको थियो । न्यूयोर्क टाइम्सका अनुसार इजरायलले पेजरको खेप लेबनान पुग्नुअघि नै

# चीनमा फस्टाउँदैछ डिभोर्स अर्थतन्त्र




एजेन्सी । विश्वकै सबैभन्दा धेरै जनसंख्या भएको देश चीनमा पछिल्ला वर्षहरुमा सम्बन्धबिच्छेदका घटना बढिरहेको विभिन्न तथ्यांकले देखाएको छ ।

विभिन्न अन्तर्राष्ट्रिय सञ्चारमाध्यममा आएका रिपोर्टअनुसार चीनमा पछिल्लो समय विवाह दर समेत घट्दो क्रममा रहेको छ । सरकारी तथ्यांकले के देखाउँछ भने वार्षिक रुपमा २०१३ मा विवाह गर्नेको संख्या लगभग १ करोड ३० लाख रहेकोमा २०२२ मा आइपुग्दा ७० लाखभन्दा कममा झरेको छ ।

चीनको तथ्यांक विभागले सार्वजनिक गरेको यो तथ्यांकले १९८५ पछिकै सबैभन्दा थोरै विवाह भएको देखाउँछ । गत वर्ष भने यो तथ्यांकमा केही मात्रामा वृद्धि देखिएको थियो । अर्थात २०२३ मा विवाहको संख्या ८० लाख पुगेको थियो । तैपनि पछिल्ला वर्षहरुमा देखिँदै गरेको आम प्रवृत्तिलाई लिएर अधिकारीहरुले चिन्ता व्यक्त गरिरहेका छन् ।

यसैबीच, सम्बन्ध विच्छेदको संख्या उल्लेख्य रुपमा बढिरहेको छ । २०१९ मा डिभोर्स गर्नेको संख्या ४७ लाख थियो । जुन तथ्यांक दुई दशकअघिको तुलनामा दुई गुणा बढी हो ।

विश्वकै दोस्रो ठूलो अर्थतन्त्र भएको मुलुक चीनको सरकारले भने यो अवस्थालाई सुधार्न विभिन्न प्रयास गरिरहेको छ । विशेषगरी जोडीहरुलाई डिभोर्स गर्नुअघि विभिन्न मापदण्ड पूरा गर्नुपर्ने जस्ता प्रावधान पनि चिनियाँ सरकारले ल्याउन थालेको छ ।

२०२१ मा सरकारले नयाँ कानुन ल्याउँदै डिभोर्स गर्नुअघि उक्त जोडी ३० दिनको 'कुलिङ अफ' अवधिमा जानु पर्ने प्रावधान बनाएको छ । यस्तो प्रावधानले छोटो समयका लागि अस्थायी रुपमा डिभोर्समा केही गिरावट देखाए पनि २०२३ मा फेरि २५ प्रतिशतले वृद्धि भएको तथ्यांकले देखाएको छ ।

विशेषगरी आम चिनियाँहरुको जीवनमा देखिएका यी दुई परिवर्तनले समग्र चीनमा जनसांख्यिक संकट निम्त्याइरहेको बताइन्छ । जहाँ सुस्त अर्थतन्त्र, तीब्र रुपमा बढिरहेको बुढ्यौली जनसंख्या र दशकौंदेखिको एक सन्तान नीतिपछि सन्तान जन्माउने महिलाहरुको संख्यामा पनि कमी देखिएको छ ।

'डिभोर्स इकोनोमी': यसरी डिभोर्सको प्रवृत्तिसँगै चीनमा पछिल्लो समय युवाहरुमा विवाहप्रतिको अवधारणामा परिवर्तन आउन थालेको छ । अर्थात् विवाह गर्न र परिवार बनाउन नचाहने युवाहरुको संख्यामा उल्लेख्य वृद्धि भइरहेको विभिन्न तथ्यांकले देखाएका छन् ।

जवकि चिनियाँ समाजमा डिभोर्स गर्नुलाई कलंक मानिन्थ्यो । र अब भने जसले विवाह गर्छ उसका लागि छुटिन पनि पहिले झैं मुस्किल हुने छैन । यसरी सांस्कृतिक रुपमा देखिएको यस्तो परिवर्तनसँगै चीनमा डिभोर्सलाई लिएर विभिन्न व्यवसायहरु पनिसञ्चालन हुन थालेका छन् ।

जस्तो कि सरकारी कार्यालयहरु अगाडि छुटिने जोडीहरुलाई खुसीसाथ सँगै राखेर अन्तिम फोटो खिचिदिने तथा डिभोर्सीहरुका तनाब झगडा जस्ता भावहरुलाई समेटेर तस्बिर खिच्ने पनि प्रचलन बढेको छ । आर्थिक आम्दानीको यस्तो तरिकालाई पनि पेशा बनाउन थालिएको छ ।

कतिपयले त सम्बन्धबिच्छेद गरेको प्रमाणपत्रमा हस्ताक्षर गरिरहेको तस्बिर वा डिभोर्स सर्टिफिकेटलाई सामाजिक सञ्जालमा सेयर गर्दै आफू स्वतन्त्र भएको प्रमाण सार्वजनिक गर्ने गरेका हुन्छन् । सरकारी कार्यालयहरु अगाडि यस्ता गतिविधिलाई कतिपय मानिसहरुले तस्बिर खिचिदिएर व्यवसाय नै चलाउने गरेका छन् । र यो क्रमश व्यवसायको रुपमा अगाडि आइरहेको बताइन्छ ।

चिनियाँ सामाजिक सञ्जालमा कतिपय व्यक्तिहरुले त सम्बन्धविच्छेदलाई उत्साहको रुपमा मनाउँदै तस्बिर सार्वजनिक गर्ने पनि देखिन्छ । यस्तोमा ती सम्बन्धविच्छेद गर्ने जोडीहरुका पुरानो विवाहको स्मृति चिन्ह वा विवाह झल्काउने तस्बिरहरुलाई औपचारिक रुपमा हटाउन कम्पनीहरु नै खुलेका छन् ।

त्यस्ता कम्पनीहरुले सम्बन्धबिच्छेदको क्रममा पुराना विवाहका प्रमाण वा चिन्हहरुलाई हटाउने काम गर्छन् । सीएनएनमा प्रकाशित समाचार अनुसार राजधानी बेइजिङभन्दा ६० माइल टाढा डिभोर्स फ्याक्ट्रीको रुपमा एउटा कम्पनी छ। जसले विवाह सम्बन्धी गोप्य तथा साझा चिन्हहरु हटाउने गर्छ । भावुक बनाउनसक्ने चिह्न वा विवाहका प्रमाणहरु नष्ट गर्ने काम गर्छ ।

यसरी सेवा दिए वापत उक्त कम्पनीले ८ देखि २८ अमेरिकी डलरसम्म चार्ज लिने गरेको छ । २०२१ मा एउटा समूहले खोलेको यो कम्पनीको हाल व्यवसाय अत्यधिक रुपमा व्यवसाय फस्टाएको छ । कम्पनी यति फस्टाएको छ कि कम्पनी खोलेदेखि हालसम्म २ हजार ५ सय जोडीहरुको विवाहका तस्बिर नष्ट गरिसकेको उक्त कम्पनीले जनाएको छ ।

यसरी सम्बन्धबिच्छेदका घटना बढ्नु र यसलाई उल्लासकै रुपमा मनाउनुलाई कतिपय विज्ञहरुले निजी स्वतन्त्रता र आफ्नो करिअर डेभलपमेन्टसँग जोडेर पनि हेर्न थालिएको छ ।

# अर्को दुनियाँ जाने बाटो फेला !

एजेन्सी । अपरिचित ठाउँमा केही फरक देख्नुभयो भने जतिसक्दो चाँडो त्यहाँबाट निस्कने प्रयास गर्नुपर्छ । तर, केही यस्ता बहादुर र साहसी व्यक्तिहरू छन् जो त्यस्ता ठाउँको रहस्य पत्ता लगाउन प्रयास गर्छन् । हाल यस्तै एउटा भिडियो भाइरल भइरहेको छ, जसमा एक व्यक्ति अनौठो तरिकाले सुरुङभित्र पसेका छन् ।

जुन ठाउँमा कम स्थान र अँध्यारो हुन्छ, त्यहाँ जान हामी डराउँछौं । तर, भिडियोमा तपाईले उक्त व्यक्तिलाई सानो ढोकाबाट भित्र पसेको देख्नुहुनेछ । तल यति धेरै सिँढीहरू छन् कि तपाईं तिनीहरूलाई गन्दै थकित हुनुहुनेछ, तर यो सुरुङबाट बाहिर निस्कने कुनै बाटो छैन । यो भिडियो जति रहस्यमय छ त्यति नै डरलाग्दो छ ।

सुरुङमा भेटियो 'अर्को संसार' जाने बाटो !

भाइरल भइरहेको भिडियोमा एक व्यक्तिले जंगलमा रहेको एउटा सानो ढोका खोलेको देख्न सकिन्छ । भित्र, उसले केही सिँढीहरू तल गएको देख्छ, तल ओर्लिएपछि उसले अरू केही सिँढीहरू देख्छ । यसरी उनी सिँढी ओर्लन जारी राख्छन् । यो साँघुरो सुरुङबाट कहिले बाहिर निस्कने हो भनी दर्शकहरू सोचिरहेका छन् तर यसको अर्को छेउ भने देखिँदैन । भिडियोले मानिसहरूलाई धेरै डराएको छ र उनीहरूले यसलाई हेर्दा धेरै अनौठो महसुस गरिरहेका छन् ।

यो भिडियो सामाजिक सञ्जाल इन्स्टाग्राममा यिकतजष्कतयचष्भ नामक एकाउन्टबाट शेयर गरिएको हो । भिडियोलाई अहिलेसम्म ३१.६ मिलियन अर्थात ३.१ करोडभन्दा बढीले हेरिसकेका छन् भने ६ लाखभन्दा बढीले लाइक गरेका छन् । भिडियोको अन्त्यमा, मानिसले तीनवटा फरक सुरुङहरू देख्छन्, तर त्यहाँबाट बाहिर निस्कने कुनै बाटो छैन । भिडियोमा कमेन्ट गर्दै अधिकांश प्रयोगकर्ताले लेखेका छन्- हेर्दा निसास्सै हुन्छ । केही अन्य प्रयोगकर्ताहरूले यसमा अक्सिजन कहाँबाट आउँछ भनेर आश्चर्य व्यक्त गरेका छन् ।

# शंखधर सहकारीको खुद नाफा ८२ लाख ६७ हजार



भक्तपुर । मध्यपुर थिमि ४ शंखधरचोकस्थित शंखधर वचत ऋण सहकारी संस्थाले गत आर्थिक वर्ष २०८०/०८१ मा ८२ लाख ६७ हजार ७९४ रुपैंया खुद नाफा गरेको छ। यो अघिल्लो आर्थिक वर्ष २०७९/०८० को तुलनामा १२ लाख ५९ हजार ८०५ रुपैंयाले बढी हो ।

सभामा संस्थाका सचिव लक्ष्मीभक्त श्रेष्ठले वार्षिक प्रतिवेदन पेश गर्दै संस्थाले सहकारी मूल्यमान्यता र सिद्धान्तका आधारमा सदस्यहरुलाई कुनै भेदभाव नगरी सरल ढंगले वित्तिय सुविधा प्रदान गर्दै आइरहेको बताए ।

यसअघि संस्थाको साधारणसभाको उद्घाटन गर्दै बागमती प्रदेशका स्वास्थ्य मन्त्री किरण थापाले सहकारी मूल्य मान्यता सिद्धान्तमा आधारित भएर सहकारी संस्थाहरु समूदायमा आधारित भएर सञ्चालन भए कुनै समस्या नआउने उदाहरण शंखधर रहेको बताउँदै बागमती प्रदेशले छिट्टै स्वास्थ्य विधेयक ल्याउने तयारी गरिरहेको जानकारी दिए । उनले विधेयक प्रदेशसभाबाट पारित भएसँगै बागमती प्रदेशमा रहेका नीजि स्वास्थ्य संस्था, अस्पतालहरुको स्तरबृद्धि लगायतका कार्य सहज हुने विश्वास दिलाए ।

सो अवसरमा मध्यपुर थिमि नगरपालिकाको सहकारी शाखा प्रमुख अभयेन्द्र रञ्जितले नगरभित्र १२८ वटा सहकारी सञ्चालनमा रहेको जानकारी गराउँदैं केही सहकारीले नियमितरुपमा नगरपालिकालाई आवश्यक कागजपत्र उपलब्ध गराई नियमित नगरेको जानकारी दिए । जसलाई आवश्यकता अनुसार अनगुमन गरी वचतकर्ताको वचतको सुरक्षाको लागि नगरपालिकाले काम गरिरहेको बताए ।

संस्थाका अध्यक्ष श्यामकृष्ण श्रेष्ठको सभापतित्वमा सम्पन्न कार्यक्रममा संस्थाका सदस्यका छोराछोरी मध्ये एसईई २०८० मा उत्कृष्ट अंक ल्याउन सफल छात्रछात्रा, ज्येष्ठ सदस्यलगायतलाई सम्मान गरिएको थियो । संस्थामा हाल ३ हजार ४५० सदस्य रहेका छन भने यसको शेयर पुँजी ४ करोड ६४ लाख ९२ हजार ५ सय र कुल सम्पत्ति ५८ करोड ३५

# महाकवि सिद्धिदास महाजुको १५७ औं जन्मजयन्ती मनाइयो



काठमाडौं । 'भाषा रहे जाति रहन्छ' भन्ने भनाई हामीबिच छोडेर जानुभएका नेपालभाषाका महाकवि सिद्धिदास महाजुको १५७ औं जन्मजयन्ती भव्यताकासाथ मनाइएको छ ।

काठमाडौंको भोटाहिटीस्थित सिद्धिदास चोकबाट सुरुभएको प्रभातफेरि नगरपरिक्रमा पश्चात स्मृति सभामा परिणत भएको थियो । उक्त सभामा सिद्धिदास स्मृति समाजका अध्यक्ष मल्ल के सुन्दर, बागमती प्रदेश सभाषद् पूर्वमन्त्री शैलेन्द्रमान बज्राचार्य, भाषा आयोगका सदस्य सुरेशकिरण मानन्धर, सिद्धिदास स्मृति समाजका सचिव दीपक तुलाधर लगायतका प्रतिष्ठित व्यक्तिहरुले उहाँको तस्वीरमा माल्यार्पण गरेको थियो ।

सिद्धिदास महाजुको जन्मजयन्तीको अवसरमा आयोजित प्रभातफेरि कार्यक्रममा फणिन्द्ररत्न बज्राचार्य, सुवर्णकेशरी चित्रकार जस्ता सम्मानित व्यक्तित्वहरुलाई सिद्धिदास महाजुको तस्वीर रहेको बग्गीमा आसन ग्रहण गराइएको थियो ।

भोटाहिटीबाट सुरुभएको प्रभातफेरी ऱ्याली असन, केलटोल, मखन, मरु, चिकंमुगल, लगन, ब्रम्हटोल, ह्युमत, क्वहिटी, भिमसेनथान हुँदै जनबहाल पुगेर सभामा परिणत भएको थियो । उक्त सभामा मच्छिन्द्र क्लवको तर्फबाट निलकाजी शाक्यले केलटोलमा स्थापना गरिएको सिद्धिदास महाजुको शालिकमा पुष्पगुच्छा अर्पण गरेको थियो ।

जन्मजयन्तीको अवसरमा सिद्धिदास स्मृति समाजका सचिव दीपक तुलाधर, निलकाजी शाक्य र बालकृष्ण प्रजापतिले सिद्धिदास महाजुको तस्वीर अंकित बेलुन उडाएको थियो ।

सोही कार्यक्रममा गायक पवित्रा कसाले सिद्धिदास महाजुको स्मरणमा जनकवि दुर्गालाल श्रेष्ठले रचना गरेको प्रभातफेरि गीत गाएको थियो । कार्यक्रममा नेपालभाषा क्षेत्रका व्यक्तित्वहरुको साथै विभिन्न विद्यालयको विद्यार्थीहरुको समेत बाक्लो उपस्थिति रहेको थियो ।

स्रोत : नेपालभाषा समाचार केन्द्र

# लागू औषध नियन्त्रण सम्बन्धी कविता प्रतियोगिता सम्पन्न

भक्तपुर । जिल्ला प्रशासन कार्यालय भक्तपुरले आइतवार लागू औषध ओसारप्रसार तथा दुर्व्यसन नियन्त्रण सम्बन्धी जनचेतनामूलक कार्यक्रम सम्पन्न गरेको छ ।

प्रतियोगितामा प्रथम हुनेले १५ हजार, दोस्रो हुनेले १२ हजार, तेस्रो हुनेले ८ हजार र सान्त्वनाले ४ हजार नगद पुरस्कार प्राप्त गरे । प्रतियोगितामा सहभागी कविता मध्ये उत्कृष्ट १० वटा छनौट गरी प्रतिपर्ध्वा गराईएको सहायक प्रमुख जिल्ला अधिकारी डोरेन्द्र निरौलाले जानकारी दिए । प्रतियोगितामा अरनिको सेकेण्डरी स्कुलका दिनेश पन्थी, आदर्श मावि लायक्‌ू थिमिका सन्दिप राई, श्री सञ्जय साई विद्या मन्दिरका पिन्स काफ्ले, बागेश्वरी माविका श्रेया शाही, ओम माविका उत्सव तिमल्सिना र प्रथा नगरकोटीको कविता पनि छनोट भएको थियो ।

विजयी विद्यार्थीहरुलाई भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापति र प्रमुख जिल्ला अधिकारी रोशनी कुमारी श्रेष्ठले पुरस्कार वितरण गरेको थियो । कार्यक्रममा प्रमुख प्रजापतिले लागू औषधले मानिसको मानसिक, शारिरीक, आर्थिक अवस्थामा नकरात्मक असर पार्ने भएकोले युवा वर्गलाई त्यस्ता कूलतमा फस्न नदिन विभिन्न सामाजिक गतिविधिमा क्रियाशिल बनाई राख्नुपर्ने बताए ।

प्रजिअ श्रेष्ठले लागू औषध ओसार पसार तथा दुर्व्यसन नियन्त्रणको लागि आयोजना गरिएको जनचेतनामूलक कार्यक्रमले भक्तपुरबासीलाई सकारात्मक सन्देश दिने आशा व्यक्त गरे । सो अवसरमा लागू औषध दुर्व्यसन र कुलतबाट हुने हानी नोक्सानीका बारेमा जिल्ला प्रहरी परिसर भक्तपुरले तयार पारिएको जनचेतनामूलक गिती नाटक र प्यारोडी नृत्य प्रस्तुत गरिएको थियो ।



# बालबालिकालाई दैनिक एउटा अण्डाले बढाउँछ उचाइ !

काठमाडौं । एउटा अध्ययनले दैनिक एउटा अण्डा खाँदा कुपोषणग्रस्त नवजात शिशुलाई स्वस्थ उचाइ हासिल गर्न सहयोग गर्ने देखाएको छ । इक्वेडरमा ६ महिनासम्म गरिएको अध्ययनपछि यस्तो नतिजा सार्वजनिक गरिएको हो । उसिनेको, फ्राइ गरिएको वा अम्लेट बनाएर खाइने अण्डाले कलिला बालबालिकालाई शक्ति दिने उक्त अध्ययनको निचोड छ ।

'पेडिएट्रिक्स' नामक जर्नलमा प्रकाशित एउटा लेखमा अण्डा खानु होचोपन नियन्त्रणको सबैभन्दा सस्तो विधि हुनसक्ने उल्लेख गरिएको छ । शिशुहरुको पहिलो दुई वर्ष उनीहरुको शारीरिक विकासका लागि संवेदनशील अवधि मानिन्छ र त्यसबेला होचोपनको समस्या देखिए त्यो दीर्घकालीन हुनसक्ने बताइन्छ ।

विश्व स्वास्थ्य संगठनका अनुसार विश्वभर पाँच वर्षमुनिका १५ करोड ५० लाख बालिबालिकामा होचोपनको समस्या छ । त्यसमध्ये अधिकांश कमजोर आय तथा मध्यम आय भएका देशमा बसोबास गर्छन् । स्वास्थ्य विज्ञहरुले यो समस्या कसरी समाधान गर्ने भन्नेबारे अध्ययनहरु गरिरहेका छन् । लोरा इयान्नोटी र उनका सहकर्मीहरुले इक्वेडरको ग्रामीण पहाडी क्षेत्रमा ६ देखि ९ महिनाका शिशुलाई निःशुल्क अण्डा बाँडेर खान दिएपछि उनीहरुमा केही सुधार देखिन्छ कि भनेर स्थलगत अनुसन्धान गरेका थिए ।

खानामा अन्डा : अनुसन्धानका लागि छनोट गरिएका एक सय ६० जना शिशुमध्ये केहीलाई ६ महिनासम्म दैनिक एउटा अण्डा खान दिइएको थियो र उनीहरुको तुलना अण्डा नदिइएका अरु शिशुहरुसँग गरिएको थियो ।

अनुसन्धानकर्ताहरुले अण्डा खाने बालबालिकाका परिवारलाई प्रत्येक हप्ता भेटेर आफ्नो योजनाको पालना भइरहेको र अण्डाले स्वास्थ्यमा कुनै नकारात्मक असर गरे, नगरेको जानकारी लिएका थिए । अध्ययन सकिँदासम्म अण्डा खाने शिशुहरुमा नखानेको तुलनामा ४७ प्रतिशतले होचोपनको समस्या कम देखिएको अनुसन्धानकर्ताहरुको दाबी छ ।

अनुसन्धान शुरु गर्दाको बेला अण्डा खान छनौट गरिएका धेरै शिशुमा उनीहरुको उमेर अनुसारको उपयुक्त उचाइ थिएन । प्रमुख अनुसन्धानकर्ता लोरा इयान्नोटी भन्छिन्, 'अण्डा खान दिँदा त्यसले शिशुहरुमा पारेको प्रभावले हामीलाई आश्चर्यचकित बनाएको छ। भोकमरी र कूपोषणबाट पीडित जनताका लागि यो उपाय निकै उपयोगी र सजिलो हुनसक्छ ।' उनले सानो पेट भएका कम उमेरका बालबालिकाका लागि अण्डा एकदमै उपयुक्त आहारा भएको बताइन्। भन्छिन्, 'अण्डामा विभिन्न पोषण तत्वहरुको मिश्रण हुन्छ, त्यही भएर यो निकै महत्वपूर्ण छ ।'

रोयल कलेज अफ पेडिएट्रिक्स एन्ड चाइल्ड हेल्थकी पोषणसम्बन्धी प्रमुख प्रा. मेरी फ्युट्रेल भन्छिन्, 'यस विषयमा धेरै अध्ययन नहुनु आश्चर्यको विषय हो । तर, केही संस्कृतिहरुमा कम उमेरका बालबालिकालाई अण्डा खुवाउनु गलत मानिन्छ र त्यसले बालबालिकामा एलर्जी जस्ता समस्या निम्त्याउन सक्ने ठानिन्छ ।' उनले शिशुहरु चार महिनाको भइसकेपछि मात्रै अण्डासहितका अन्य पोषणयुक्त खानेकुरा खुवाइनुपर्ने सल्लाह दिएकी छन् । सम्भावित जोखिम रोक्न कलिला शिशुलाई खुवाइने अण्डा राम्ररी पकाइएको हुनुपर्ने उनको तर्क छ ।

# उमालेको पानीमा दालचिनि राखेर पिउँदाको फाइदा

एजेन्सी । पृथ्वीमा धेरै औषधीहरू छन् । केहि यस्ता औषधिहरू छन् जुन सजिलै प्राप्त हुने र जताततै उपलब्ध छन् । तर, त्यसका बारेमा धेरै जानकारी नभएका कारण थोरै मानिसले मात्रै त्यसबाट फाइदा लिन सक्छन् । तर पूर्ण लाभ लिनबाट उनीहरु लगभग वञ्चित छन् । आज हामी एउटा यस्तो औषधिको बारेमा बताउन गइरहेका छौं जुन लगभग हरेक भान्सामा पाइन्छ ।

०१ दालचिनीको अवस्था: यो मसलाको नाम नै चिनीसँग समाप्त हुन्छ । यसलाई दालचिनी भनेर चिनिन्छ । वास्तवमा, यो परिकार स्वादिष्ट बनाउन प्रयोग गरिन्छ । यो एक मसला हो जुन जीवन बचाउने जडिबुटी भन्दा कम छैन, तपाईले यो सही सुन्नु भएको छ, दालचीनीका फाइदाहरू धेरै छन् ।

०२ आयुर्वेदिक अस्पताल नगर बलियाकी सात वर्षको अनुभवी (मेडिसिनमा एमडी र पीएचडी) मेडिकल अधिकृत डा प्रियंका सिंहले यो निकै सुगन्धित र स्वादिलो मसला भएको र शरीरका लागि निकै उपयोगी हुने बताइन् । आयुर्वेदका अनुसार दालचीनी निकै प्रभावकारी औषधि हो । आयुर्वेद चिकित्सकको सल्लाह लिएर दालचीनीको उचित सेवन गर्नाले शरीरबाट सबै रोग हटाउन सकिन्छ । यो पेटको लागी एक पूर्ण वरदान हो ।

०३ विज्ञहरूका अनुसार दालचीनीले एउटा मात्र होइन धेरै रोगमा पनि राम्रो काम गर्छ । जस्तै हिचकी, भोक नलाग्ने, बान्ता, आँखाको रोग, दाँत दुख्ने, टाउको दुख्ने, रुघाखोकी, पेट फुल्ने, कोलेस्ट्रोल, नाकको रोग, झाडापखाला, आन्द्राको रोग, पेटको रोग, छालाको रोग, ज्वरो, बहिरापन, साइनस, रगत बग्ने, धेरै हुन्छ। टीबी र गठिया जस्ता धेरै रोगहरूमा लाभदायक। दालचीनी मधुमेह रोगीहरुको लागी एक रामबाण औषधि हो ।

०४ दालचीनीको प्रयोगको बारेमा कुरा गर्दा विज्ञहरुका अनुसार यसको पात, बोक्रा, जरा, तेल सबै उपयोगी हुन्छ। दालचीनी (छालको धुलो) - १ देखि ३ ग्राम, पातको धुलो १ देखि ३ ग्राम र यसको तेलमा २ देखि ५ थोपा मिसाएर चिकित्सकको सल्लाहबमोजिम प्रयोग गर्नाले २१ भन्दा बढी रोगबाट छुटकारा पाउन सकिन्छ। दालचीनीको औषधीय प्रयोग प्रायः कासोको रूपमा गरिन्छ ।

०५ दालचीनी धेरै गरम हुन्छ, त्यसैले गर्भवती महिलाले यसको सेवन गर्नु हुँदैन । दालचीनीले गर्भावस्थालाई रोक्छ । धेरै सेवन गर्दा टाउको दुख्ने समस्या बढ्छ । त्यसैले आयुर्वेद चिकित्सकको सल्लाह बिना कुनै पनि रोग निको पार्न यसको प्रयोग नगर्नुहोस् । केवल एक विशेषज्ञले उमेर र रोग अनुसार सही खुराक र मात्रा निर्धारण गर्न सक्छ ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### राजनीतिमा देखिएको बिकृति, विसंगति र बेथिति !

देशमा विगत देखि नै सत्ता र शक्तिको दुरुपयोगका विभिन्नरूपमा प्रकट हुने गरेको छ। सत्ताको आडमा गरिने राज्यको दोहन प्रवृत्ति पनि दुरुपयोग नै हो । नेपालका प्रायः सबै राजनीतिक दलमा सत्ताको दुरुपयोग गरेर राज्यको दोहन गर्नेहरूको पहुँच र प्रभावमात्र होइन प्रभुत्वसमेत रहेको अनेकौं घटनाक्रमले देखिएका छ।

हालै मात्र सहकारी संस्थामा जनसाधारणले बचत गरेको रकम ठगीको घटना होस् वा देशमा भएका सुन काण्डदेखि तस्करीसम्मको अपराधमा राजनीति गर्नेहरूको संरक्षण हुनेगरेको छ । यसै संरक्षण भएकै कारण विगतमा जाँचबुझ आयोगले दोषी ठहर गरेकालाई समेत कुनै प्रकारको कारवाही नपाउने उम्काउने गरिएको छ।

नेपालको राजनीतिक वृत्तमा तस्कर र ठगहरूको जत्तिकै प्रभाव र उपस्थिति 'कामचोर ठेकेदार'हरूको पनि देखिन्छ । संघ, प्रदेश र स्थानीय तहका पदाधिकारीमध्ये कति जना निर्माण व्यवसायमा पनि छन् भन्ने भरपर्दो तथ्याङ्क त कतै नहोला तर सुशासनका लागि यो प्रवृत्ति महारोग नै बन्न पुगेको छ।

शासनमा 'स्वार्थको बझान'लाई उपेक्षा गरिएपछि हुने यस्तै सत्ताको दुरुपयोग नै हो। चुनाव जित्नैका लागि राजनीतिक दलका नेताहरूले राज्यबाट दोषी बनाइएका र नवकुवेरहरूलाई उम्मेदवार बनाउन थालेपछि यस्तो विकृति बढ्ने नै भयो। हेक्का रहोस् १ चुनाव जित्नका यस्तै 'अराजनीतिक' उपाय अपनाउन थाल्ने हो भने छिटै नै राजनीतिक नेताहरू स्वयं विस्थापित हुनेछन्। यस्तै हालै सरकारकै पहलमा संसद सदस्यहरु रहेको सहकारीको रकम दुरुपयोग प्रकरणमा समेत राज्य सयन्त्रकै प्रयोग भएको प्रतिवेदन बाहिर आएको छ। यसरी सरकारी निकाय र सत्तामा रहेकै व्यक्तिहरुको संलग्नताबाट भएको बेथितिको निराकरण हुने आम जनसमुदायले यस प्रकारको कार्यमा न्याय पाउने सायदै सोचेको होला। साथै देशमा सहकारी संस्थामा देखिएको यस प्रकारको समस्या २ दशक अघि नै गठित आयोगको प्रतिवेदनमा उल्लेख गरिएको थियो। जुन प्रतिवेदन अहिलेसम्म कार्यान्वयन हुन नसक्नु पनि सत्ता र राज्य सयन्त्रकै संलग्नताबाट भएको अनुमान सहजै लगाउन सकिन्छ।

यसरी शासकहरूले सम्पत्तिको लोभ गरे भने सत्ताको दुरुपयोग सुरु हुन्छ । पूर्वका चाणक्य वा पश्चिमका प्लेटोजस्ता राजनीतिक चिन्तकहरूले शासक सम्पत्तिका मामिलामा 'जोगी' हुनुपर्छ भनेका थिए। अहिले त्यसो भन्नु त अव्यावहारिक होला तर राजनीतिकर्मीले व्यवसाय गर्ने हो भने पदको दुरुपयोग गर्नु हुँदैन। देशमा अहिले देखिएको बेथिति, अराजकता र भ्रष्टाचार हेर्दा स्थितिमा तत्काल परिवर्तन नहुने हो भने देश निकै कठिन अवस्थामा पुग्ने लक्षण देखिएको छ । देशलाई यस दुरवस्थाबाट मुक्त गर्ने दायित्व राजनीतिक नेतृत्वकै हो। जसको अन्त्य गर्ने दायित्व बोध शीर्ष नेताहरूले गरून्।

# हाम्रो अपेक्षाको नयाँ राजनीति !

● डा. सञ्जिव हुमागाई

राजनीति के हो ? बाट सुरु गरौं । सन् १९९२ को अमेरिकी राष्ट्रपति निर्वाचनमा बिल क्लिन्टन क्याम्पका गुरु मानिएका कार्भिलले 'राजनीति ! यो सब अर्थतन्त्र हो, पागल' भन्ने शब्दावली प्रयोग गरेका थिए र यो धेरै नै प्रचलित पनि भएको थियो।

यसले आर्थिक विकास गर्नु नै राजनीति गर्नु हो भन्ने भाष्यलाई स्थापित गर्न मद्दत गऱ्यो । सन् २००६-०७ को विश्व आर्थिक मन्दी र त्यसको लामो प्रभाव, कोभिड-१९, जलवायु परिवर्तन जस्ता समस्याहरूले चलायमान अर्थतन्त्र प्रायः सबै देशको राजनीतिको अतुलनीय प्रमुख राजनीतिक मुद्दा बनेको छ।

नेपाल पनि त्यसको अपवाद बन्न सकेन । यहाँ अलि फरक छ भने नीति, योजना, कार्यान्वयन, अनुगमन र सोही चक्रमा आधारित भएर नीति र योजनाको पुनः तर्जुमा, कार्यान्वयन र अनुगमन चक्रको अभ्यासभन्दा पनि गफ, घोषणा, निर्देशन, परिपत्र र अस्पष्ट विरोधहरू हाबी छन्।

नीति योजनालाई कागजको घोडा मान्ने र सबै समस्याको समाधान नेता र उच्च-पदस्थ कर्मचारीहरूको दिमागबाट फ्याट्ट-फ्याट्ट आउने दैवीय क्षमता भएका महान् शासकहरूले भरिएको देशमा छौं हामी।

फेरि राजनीतिमा नै जाऔं। जरुर अर्थतन्त्र राजनीतिलाई व्याख्या गर्ने अपरिहार्य शब्द हो । राजनीतिशास्त्र र परराष्ट्र सम्बन्धका आधुनिक सिद्धान्तको जननी मानिएको कौटिल्य कृतिको नाम राजनीतिशास्त्र नभएर अर्थशास्त्र राखिएको थियो । प्राचीन ग्रीसमा सार्वजनिक जीवन र व्यक्तिगत जीवनलाई छुट्याइएको थियो।

सार्वजनिक जीवन अन्तर्गत नागरिकहरूको गुजारा सम्बन्धी क्षेत्रमा गरिने कामलाई पोलिटिका वा राजनीति भन्ने गरिन्थ्यो। यसमा सहभागी हुने व्यक्तिहरूले आफैंले अवलम्बन गर्ने कानुन वा विधि तर्जुमा गरे जुन कालान्तरमा लोकतन्त्रको आधार बन्यो।

यसरी हेर्दा आधारभूत रूपमा राजनीति भनेको सार्वजनिक जीवनमा आबद्ध नागरिकहरूले आम नागरिकको हितको लागि छलफल र संवादबाट आवश्यक नीति र नियम निर्माण गर्ने, त्यसको कार्यान्वयनको व्यवस्था गर्दै जाने गतिविधि हो। स्वाभाविक रूपमा शक्तिको बाँडफाँड त्यसको केन्द्रमा हुने नै भयो।

राजनीतिलाई दार्शनिकहरूले विविध कोणबाट व्याख्या गरेका छन्। एरिस्टोटलले राजनीतिलाई व्याख्या गर्दा मानिसको चरित्रलाई ध्यान दिएका छन् र भनेका छन्- मानिस एक राजनीतिक जनावर हो । मानिस आफैंमा पूर्ण हुँदैन र सामाजिक सम्बन्धबाट मात्र पूर्णता पाउँछ । आम नागरिकहरूलाई खुशी बनाउनु नै राजनीतिको प्रधान विषय हुनुपर्दछ भन्ने उनको धारणा रहेको छ।

अधिकार माग गरेर वा लडेर लिने विषय हो भने प्राधिकार आफ्नै मन-मस्तिष्कबाट कुनै व्यक्ति वा संस्थाको विचार वा व्यवहारप्रति सिर्जना हुने विश्वास वा सम्मान हो।

म्याक्स वेबरले राजनीतिलाई अति नै सरल तरिकाले परिभाषित गर्दै भनेका छन्- राजनीति भनेको शक्ति र नियन्त्रणको वितरण हो । डेभिड इस्टोनका लागि राजनीति भनेको मूल्य र प्राधिकारको वितरण हो । सारमा राजनीति भनेको शक्ति र प्राधिकारको वितरणको विधि हो । र, यसको सन्तुलनको राजनीतिलाई हामी असल राजनीति भन्न सक्छौं।

वर्तमान नेपाली राजनीतिमा शक्ति छ । जरुर त्यसको वितरणमा जटिल समस्याहरू छन् । यद्यपि सरकार र सत्ता हाँकिरहेका नेता, उच्च पदस्थ कर्मचारी एवं दलका नेताहरूसँग कागजमा लेखिएको शक्ति छ। आवश्यक पर्दा परिपत्र वा सर्कुलर जारी गरेर पनि थप शक्ति सिर्जना गर्छन्।

तर राष्ट्र र राजनीति हाँक्ने प्राधिकार गुमाउँदै गएका छन् । यो नै आजको हाम्रो देशको सबैभन्दा ठूलो समस्या हो। शक्ति र प्राधिकार सन्तुलनको राजनीति नै हाम्रो परिकल्पनाको नयाँ राजनीति हो।

नेपालको राजनीतिक बहसमा शक्तिको बारेमा धेरै छलफल, चिन्तन गरे पनि प्राधिकार वा अथोरिटीले अझै पनि खासै स्थान प्राप्त गर्न सकेको छैन । प्रायः अथोरिटीलाई अधिकार भनेर अनुवाद वा प्रयोग गरेको पनि देखिन्छ । तर अधिकारले मात्रै अंग्रेजी शब्द अथोरिटीको भावलाई पूर्णता दिन सक्दैन।

झट्ट सुन्दा उस्तै सुनिए पनि शक्ति र प्राधिकारमा धेरै भिन्नता छ। सँगसँगै दुई शब्द एकअर्कासँग परिपूरक पनि छन् । जहाँ शक्ति छ त्यहाँ मात्र प्राधिकारको परिकल्पना गर्न सकिन्छ र शक्ति वा प्राधिकारको छलफल एउटा सभ्य समाजलाई आधार मानेर मात्र गर्न सकिन्छ।

शक्ति भन्नाले अरूको भावना वा विचारको पर्वाह नगरी आफूले सोचे अनुरूप व्यवहार गर्न लगाउन सक्ने क्षमता हो। तर यस्तो शक्तिले वैधता प्राप्त गर्न प्राधिकार आवश्यक पर्दछ । प्राधिकार चाहिं सरोकारवालाहरूको सहमतिमा सिर्जना हुन्छ।

शक्ति व्यक्तिमा मात्रै अन्तरनिहित हुन सक्छ तर प्राधिकार सामाजिक एवं राजनीतिक सम्बन्धमा सिर्जना हुन्छ । जहाँ आफूसँग शक्ति भएका व्यक्ति वा संस्थाले शक्तिको निर्मम प्रयोग नगर्दा पनि आफूले चाहेको नतिजा निकाल्न सक्ने प्रतिष्ठा राख्छन्। यहाँ सरोकारवालाहरू स्वस्फूर्त रूपमा व्यवहार गर्छन्। जस्तै, हामी सडक बत्ती नभएको चोकहरूमा ट्राफिक प्रहरीको हातको इशारालाई हेर्दै सवारी चलाउने वा आवतजावत गर्ने गर्छौं । त्यसको लागि ट्राफिक प्रहरीले काँधमा बन्दुक बोक्नु वा हवाई फायर गर्नुपर्दैन।

यदि तपाईंलाई विगतको तुलनामा ट्राफिक प्रहरीलाई सडकमा टेर्न छोडेको जस्तो लाग्दछ भने ट्राफिक प्रहरीले शक्ति होइन प्राधिकार गुमाएको हो।

राजनीतिमा प्राधिकार हुनु भनेको नेतृत्वमा रहेका व्यक्तिहरूको विचारलाई नागरिक वा मातहतका कर्मचारी, वा सोही दलका कार्यकर्ताले स्वीकार एवं सम्मान गर्दै स्वस्फूर्त रूपमा अनुसरण गर्ने अवस्था हो । नेतृत्व सँगसँगै सरोकारवालाको आचरण वा क्षमता र उनीहरूको सम्बन्धले प्राधिकारको अवस्थालाई निर्धारण गर्दछ।

खल्लो लाग्ला एउटा सिधा उदाहरण हेरौं : यदि कुनै दलका बहुसंख्यक कार्यकर्ताहरू अराजक छन् भने सो दलमा जति नै असल, इमानदार, सक्षम नेताहरू रहे पनि उनीहरूको विचार सो दलमा कार्यान्वयन हुने सम्भावना कम हुन्छ । यो उदाहरण राजनीतिक दलमा मात्रै लागू हुने होइन। राज्यका हर तह र निकाय, सार्वजनिक एवं सामाजिक संस्थाहरूमा पनि उत्तिकै लागू हुन्छ।

प्राधिकार हाम्रो परिकल्पनाको नयाँ राजनीतिको बहसको केन्द्रबिन्दु हुनुपर्दछ । त्यस्तो राजनीतिमा प्रधानमन्त्रीदेखि हर कार्यालयका प्रमुखहरूले आफूले कसैको असहयोग वा कसैसँगको सम्बन्धका कारण खोजेको नतिजा दिन सकिन भन्ने गुनासो गरेर झारा टार्ने अवस्थाको परिकल्पनासम्म पनि गर्न सकिँदैन । त्यसो बोल्नु भनेको नै नेतृत्वमा प्राधिकार नरहेको प्रमाणित हुनु हो भन्ने भाष्य राजनीतिमा स्थापित हुनुपर्दछ।

राजनीतिमा प्राधिकार स्थापित हुन नेता वा कर्मचारीको बोलीप्रति आम नागरिकले विश्वास गर्ने वातावरण बन्नुपर्दछ । त्यो विश्वास सिर्जना कसरी गर्न सकिन्छ, नयाँ राजनीतिको प्रधान प्रश्न बन्नुपर्दछ।

नेताले कर्मचारीलाई र कर्मचारीले राजनीतिक नेतृत्वलाई सार्वजनिक रूपमा नै दोषारोपण गरेर आफूलाई पानीमाथिको ओभानो बनाउने गलत संस्कारको अन्त्य त्यो नयाँ राजनीति र प्राधिकार स्थापनाको अकाट्य प्रस्थान बिन्दु हो।

दोषारोपणको राजनीति । देश भित्र हुने हरेक घटनामा विदेशीलाई देखाएर आफू चोखिने राजनीति। २-४ जना वरिष्ठ नेतालाई कोठाभित्र सहमति गरेर लोकतन्त्रमाथि नै उपहास गर्ने राजनीति।

राज्यको सेवा र सुविधाको अधिकतम प्रयोग गरेर सुकिलामुकिला कपडा लगाएर निर्वाचित जनप्रतिनिधिलाई खिसिट्युरी गर्ने राजनीति । आफ्नो सिद्धान्त, नीति र कार्यक्रम नै स्पष्ट नहुने राजनीति। सदनलाई बाइपास गर्ने राजनीति।

यीसँगै नेपाली जनतालाई विभाजित गर्दै, निराशा र नैराश्यता छर्ने र हाम्रो देशलाई विश्व मानचित्रमा सानो र कमजोर देश भनेर चिनाउन तल्लीन सबै प्रकारका पुराना र पाखण्डी राजनीतिलाई बिदाइ नगर्दासम्म नयाँ राजनीति स्थापित हुन सक्दैन।

राजनीतिक दल र त्यसको नेतृत्व राज्य सञ्चालनको सिद्धान्तमा आधारित नीतिमा अडिग रहेर आफ्नो नीति एवं कार्यक्रमको बारेमा जनसमर्थन जुटाउन आम नागरिकसँग संवाद गर्ने, जनतासँगको संवादबाट आफ्ना नीति एवं कार्यक्रमलाई परिष्कृत गर्ने पद्धतिलाई अनुसरण गर्ने क्षमता र तत्परता देखाउँदा मात्र नयाँ राजनीति सम्भव छ । जब दलहरू त्यस्तो राजनीतिमा अविचलित रहन्छन्, त्यहाँ कर्मचारीले निर्वाचित नेतृत्वलाई नटेर्ने भन्ने हुँदै हुँदैन।

राजनीतिक दल र नेतृत्वले प्रस्टसँग बुझ्नुपऱ्यो २१औं शताब्दीमा राजनीतिक प्राधिकार जनतासँगको निरन्तरको संवादबाट मात्र प्राप्त गर्न सकिन्छ । आम नेपाली जनतासँग रहेको सूचना, समाज, अर्थतन्त्र र राज्य सञ्चालनको बारेमा उनीहरूको धारणा एवं मागलाई नजरअन्दाज गर्ने दल र नेताको राजनीतिक भविष्यमा कालो बादल लागिसकेको छ।

तसर्थ, भावना र इमानदारी सहितको 'संवाद' नै हामीले परिकल्पना गरेको नयाँ राजनीति हो । यसले लोकतान्त्रिक राजनीतिको जीवनको रूपमा रहेको प्राधिकारलाई स्थापित गर्दछ र अहिलेको शक्ति केन्द्रित पुरानो युगको राजनीतिलाई सदासदाको लागि बिदाइ गर्दछ। अनलाइनखबर

# भक्तपुरमा यैँया पुन्ही कसरी मनाइन्छ ?



भक्तपुर । भक्तपुरको टोलटोलमा यम्बद्यः ठड्याएर आठ दिनसम्म मनाइने यैँया पुन्ही गत आइतबारबाट सुरु भएको थियो । जात्राको पहिलो दिन नगरका टोलटोलमा यम्बद्यः का रूपमा १५-१६ फिट अग्ला लिङ्गोहरू ठडाएर जात्रा सुरु गरिएको हो । प्रत्येक वर्ष भाद्र शुक्ल पक्ष द्वादशीको दिन स्थानीयवासीले यसलाई यम्बद्यः उठाइएको भन्ने मान्यता रहेको इतिहासविद् एवं संस्कृतिविद् प्राडा पुरुषोत्तमलोचन श्रेष्ठले जानकारी दिए ।

भाद्रशुक्ल त्रयोदशी अर्थात् दोस्रो दिनलाई यम्बद्यःको नित्यपूजा र आरतीबाहेक अरू विशेष पूजा नहुने हुँदा 'दिकु' (विश्राम) भनी मान्ने प्रचलन रहेको छ । भाद्रशुक्ल चतुर्दशी अर्थात् तेस्रो दिन साँझ परेपछि खौमाटोलस्थित इन्द्रायणी देवगृहबाट इन्द्रायणीलाई रथमा विराजमान गराई, 'वाचा मुकेगु' भनी आधा देश परिक्रमा गराई बाजागाजासहित धुमधामसँग जात्रा गरी सिद्धपोखरीमा लाने प्रचलन छ । यस दिन रातभरि सिद्धपोखरी अर्थात् इन्द्र दहमा देवतालाई राखेर भव्य मेला भर्ने गरिन्छ ।

भाद्रशुक्ल पूर्णिमा अर्थात् चौथो दिन भक्तपुरका बासिन्दा बिहानै सिद्ध पोखरी पुगेर ' इन्द्र दह स्नान' गर्ने गर्दछन् । यस दिन बिहानदेखि सिद्धपोखरीमा स्थानीयको भीड लाग्ने गर्दछ । त्यस दिन समय् चढाएर, खाएर यैँयापुन्ही मान्छन् । समय्बजीमा छ्वयला, सारां (कर्कलोको अचार), भिजाएको केराउ, काँक्रो विशेष रूपले खाने चलन छ । बेलुकी इन्द्रायणी देवीलाई पुनः रथमा विराजमान गराई बाजागाजासहित भक्तपुरको आधा देश परिक्रमा गराई देवगृह देवता भित्र्याउने गरिन्छ ।

आश्विनकृष्ण प्रतिपदा अर्थात् पाँचौं दिन नित्य पूजा र आरती गर्ने गरिन्छ । आश्विनकृष्ण द्वितीया अर्थात् छैटौं दिन इन्द्रजात्रा उत्सवका रूपमा विशेष महत्वका साथ सला गणेश, यामता, मुपात्र जात्रा मनाउने गरिन्छ । त्यस दिन तचपाल टोलबाट 'यामता' इन्द्रबत्ती बालेर जात्राको शुभारम्भ गरिन्छ । यहाँ दतात्रय मन्दिर सामुन्नेको विशाल चोकमा जात्रा हेर्न ठुलो भीड लाग्ने गर्दछ । साकुलान टोलका मानन्धरहरूले बाँसले बनेको त्रिशूल आकारको यामतालाई आँगनमा भैरवनाथका सामुन्नेमा राखी विधिवत् पूजा गर्ने प्रचलन छ ।

जात्राको सातौं दिन अर्थात् आश्विन कृष्ण तृतीयाका दिन चोछे टोलका छुमा गणेश र गोलमढी टोलका मानन्धरहरूले यामतासहित देश परिक्रमा गरी जात्रा मनाउँछन् । मूपात्र पनि आफ्ना दुईजना धिचाहरू लिएर अघिल्लो दिनमा जस्तै नगर परिक्रमा गर्दै सामुन्नेमा परेका यम्बद्यःहरूलाई खड्गले प्रहार गर्दै जात्रा मनाउने गरिन्छ । जात्राको अन्तिम दिन आश्विनकृष्ण चतुर्थीमा भैरवनाथको जात्रा, पुलुभैलद्य जात्रा, यामता जात्रा, पुलुकिसी जात्रा, मूपात्र जात्रा भव्य रूपमा मनाउने गरिन्छ ।

इन्द्रजात्राको समापनका दिन धुमधामसँग जात्रा मनाउने प्रचलन छ । यस दिनमा टौमढी टोलका भैरवनाथलाई रथमा राखी देश परिक्रमा गरी जात्रा चलाइन्छ । जात्रामा तेखाचोका मानन्धर हरूले दुईवटा यामता ल्याउने र बुलुचाहिटी सामुन्ने चखुन्चा फल्चातिर अभिमुख गरी यामता बालेर भैरवनाथको जात्रामा सरिक हुने गरेको स्थानीय विजयप्रसाद धौभडेल बताउँछन् ।

त्यस दिन भैरवनाथको मन्दिरको भित्तामा झुन्ड्याइराखेको पुलु भैलद्यः (मान्द्रोमा चित्रित मसान भैरव)को जात्रा पनि चलाउने उनले जानकारी दिए । ठाउँठाउँमा छ्वाली बाल्दै नीलो पहिरनमा सेतो वर्णको पुलुकिसीको जात्रा पनि यहाँ मनाइन्छ । भैरवनाथ मन्दिरको मूलद्वारबाट खड्ग उठाएर बाहिरिँदै धिचासहित भएर मूपात्रको जात्रा चल्ने उनले जानकारी दिए ।

इतिहासविद् प्राडा श्रेष्ठका अनुसार गणेश चतुर्थीका दिनमा बसुन्धराले व्रत बस्दा पूजाका लागि चाहिने 'खाइसी' (काली ज्यामिरेका जातिको एक किसिमको तीतो अमिलो फल ) र पारिजातको फूल लिन उनका छोरा इन्द्र स्वर्गलोकबाट सुटुक्क पृथ्वीलोकमा झरेका थिए । उनले फलफूल चोरेको यहाँका बासिन्दाले थाहा पाएपछि उनलाई पक्रेर चोरेका फलफूलसहित सबैले देख्ने ठाउँमा (दोबाटो चौबाटो) बाँधेर राखेका थिए ।

इन्द्रजात्राको पहिलो दिन दोबाटो चौबाटोमा खडा गरिने यम्बद्यः उनै इन्द्र हुन् भन्ने मान्यता रहँदै आएको छ । इन्द्रका छोरालाई बन्दी बनाएर राखेको थाहा पाएपछि बसुन्धरा डाकिनीको भेषधारण गरी पृथ्वी आइन् र शीत र हुस्सुले वातावरणलाई छोपी कसैले नदेख्ने गरी छोरा देवराजलाई स्वर्गमा लगेको किंवदन्ती छ । छोरालाई भगाउन स्वर्गबाट ऐरावत हात्तीसमेत ल्याएकाले जात्राको अन्तिम दिन ऐरावत हात्ती अर्थात् पुलुकिसी जात्रा मनाउने प्रचलन रहेको छ । अर्को किंवदन्तीअनुसार स्वर्गका राजा देवराज इन्द्रकी आमा वसुन्धरालाई भाद्रशुक्ल चौथीका दिन व्रत बस्न पारिजात फूलको खाँचो पऱ्यो । इन्द्रले आफ्ना छोरा जयन्तलाई पारिजातको फूल खोज्न पृथ्वीमा पठाइन् । जयन्त पारिजातको फूल खोज्दै दैत्यको बगैंचामा प्रवेश गरे । दैत्यहरूले उनलाई देखेर पक्रेर दोबाटोमा लगेर खम्बामा बाँधेर राखे । यो कुरा इन्द्रले थाहा पाई दलबलसहित आएर दैत्यसँग लडाइँ गरे ।

लडाइँमा इन्द्रको जित भयो । दैत्यहरूले इन्द्रको सेनालाई जयन्त भएको स्थानमा लिएर गए । त्यहाँ दैत्यहरूले जयन्तलाई बाँधेको डोरी काटेर माफी मागे । त्यस क्रममा दैत्यलाई जनतामाझ सहर परिक्रमा गराइएको भन्ने विभिन्न ग्रन्थमा उल्लेख भएको आधारमा जात्रा प्रारम्भ गरिएको किंवदन्ती रहेको इतिहास तथा संस्कृतिविद् प्राडा श्रेष्ठ बताउँछन् ।

# लाखे आजुलाई ब्वः छाइगु कार्यक्रम सम्पन्न



भक्तपुर । इन्द्रजात्राको अन्तिम दिन, भक्तपुर नगरपालिका वडा नं ७ गोल्मढीमा भक्तपुरको लाखे आजुलाई ब्वः छाइगु कार्यक्रम सम्पन्न गरेको छ ।

सो ब्वः छाइगु कार्यक्रममा भक्तपुरका लाखेको सम्मानार्थ इच्छुक स्थानिय जनसमुदायले चिउरा, छोयला, बोडी, चना, आलु, लसुन, अदुवा, माछा, दहि, वः लगायतका परिकारहरु आफ्नो मनसायले राखी उक्त कार्यक्रमलाई थप आकर्षक बनाएको हो ।

उक्त दिन भक्तपुरमा पुलुकिसी जात्रापनि भएको थियो ।

# ट्राफिक जाम छ/छैन हेर्न उपयोगी एप्स



काठमाडौं । आफ्नो नीजि सवारी साधनबाट उपत्यकाको यात्रा गर्दा सबैभन्दा असहज र तनावपूर्ण अवस्था के होला ? पक्कै पनि ट्राफिक जाममा फस्नु हो । यो कुनै नौलो होइन, उपत्यकाको काठमाडौं र ललितपुरको सहरी क्षेत्रमा त झन जाम समस्याकै रुपमा देखिएको छ ।

यात्राको क्रममा अचानक जाममा फस्दा ट्याक्सीमा मिटर बढ्दै जान्छ, बाइकमा समय बर्बाद हुन्छ, अनि बसको पर्खाइ पत्यार लाग्दो हुन्छ । तर फोनबाटै तपाईंले ट्राफिकको स्थिति थाहा पाएर वैकल्पिक मार्ग रोज्न सक्नुहुन्छ । जाममा फस्नुपर्ने तनावबाट मुक्त हुनका लागि यो नै स्मार्ट तरिका हो ।

गुगल म्याप्स

यो लोकप्रिय एपमध्ये एक हो, गुगल म्याप्स । तपाईं जहाँ जान चाहनुहुन्छ, लोकेसन टाइप गरेर रुट हेर्नुहोस् । यदि जामको समस्या छ भने गुगलले तपाईंलाई रातो रङमा देखाउँछ । हल्का जाम छ भने सुन्तला रङ र कुनै जाम छैन भने हरियो रङमा मार्ग देखाइन्छ । नजिकका सबै रुटहरू, वैकल्पिक बाटो र समयमा पुग्नसक्ने विकल्प सहित लाग्ने समय गुगल म्याप्सले सजिलै देखाउँछ ।

एप्पल म्याप्स

त्यस्तै आईफोन प्रयोगकर्ताहरूका लागि एप्पल म्याप्स । यो एपमा तपाईंको गन्तव्य टाइप गरेर 'कार' आइकन ट्याप गर्नुहोस् । त्यसपछि तपाईंले जामबिना यात्रा गर्न मिल्ने बाटो र त्यसमा लाग्ने समय देख्न सक्नुहुन्छ । एप्पल म्याप्सलाई प्रिइन्स्टल गरिएको हुन्छ, तर छैन भने एप्पल स्टोरबाट सजिलै डाउनलोड गर्न सक्नुहुन्छ ।

वाज (ध्वशभ)

वाज एप एन्ड्रोइड र आईओएस दुवैमा उपलब्ध छ । नेपालमा तुलनात्मक रूपमा यसका प्रयोगकर्ता कम छन् । तर यसमा पनि ट्राफिक जाम कुनकुन स्थानमा भइरहेको छ भने हेर्न सकिन्छ । यसका लागि सर्चबारमा गई स्थानको नाम टाइप गर्नुहोस् । त्यसपछि त्यहाँसम्म पुग्ने बाटोको अवस्था कस्तो छ भनेर हेर्न सकिन्छ । यो एप एन्ड्रोइडमा डाउनलोड गर्न यहाँ र आईओएसका लागि यहाँ क्लिक गर्नुहोस् ।

माथि उल्लिखित सबै एपमा लोकेसन नराखेर पनि कुनकुन स्थानमा सडकको अवस्था कस्तो छ भनेर हेर्न सकिन्छ । साथै कुनै पनि सर्च इन्जिन (गुगल, बार्ड आदि)मा 'ट्राफिक जाम' भनेर सर्च गर्न सक्नुहुन्छ । यदि कुनै पनि सडकमा अत्यधिक जाम छ भने स्वतः रातो रंग देखिन्छ । जाम नभएमा हरियो र हल्का जाम भएमा सुन्तला रंग देखिन्छ । यसबाट तपाईलाई गन्तव्य सम्म पुग्न मद्दत मिल्छ ।

# ल्यापटप र कम्प्युटरको लागि कुन माउस राम्रो छ ?




काठमाडौं । ल्यापटप र कम्प्युटर चलाउनको लागि माउस किन्दा हाम्रो मनमा एउटा मात्र शंका हुन्छ । ताररहित माउस लिने कि तार भएको माउस लिने भनेर । माउस कम्प्युटरलाई निर्देशनहरू दिन र कर्सर चलाउन प्रयोग हुने एक साधन हो ।

स्क्रिनमा कुनै पनि फाइललाई एक ठाउँबाट अर्को ठाउँमा लैजानका लागि वा कुनै पनि आइकनमा क्लिक गर्नका लागि हामीले माउसको सहयोग लिन्छौं ।

इतिहास हेर्ने हो भने माउसको आविष्कार सन् १९६० को दशकमा डग्लस कार्ल एन्जेलबर्टले गरेका हुन् । माउसको आविष्कार हुने बेलामा यसको नाम प्वाइन्टर डिभाइस राखिएको थियो । अहिले माउस विभिन्न आकार र प्रकारमा पाइन्छ । यसै सन्दर्भमा आज हामी तारसहित र ताररहित मध्ये कुन माउस राम्रो भन्ने विषयमा चर्चा गर्दै छौं । ताररहित माउस तार भएको माउस भन्दा थोरै सुस्त हुन्छ । यो कुरा गेमिङ गर्नेहरूले बढी बुझ्नेछन् । वास्तवमा, ताररहित माउसको प्रतिक्रिया समय तार भएको माउसको भन्दा ढिलो हुन्छ ।

यसले गेमिङमा समस्या निम्त्याउँछ । धेरैजसो गेमरहरू तार भएको माउसको साथ खेल्न रुचाउँछन् । यदि तपाईं पनि गेमर हुनुहुन्छ भने वायर्ड माउस तपाईंको लागि राम्रो विकल्प हो । ताररहित माउसको साथ, तपाईं जहाँबाट पनि काम गर्न सक्नुहुन्छ । अर्थात्, एक सीमित दायरामा, तपाईं जहाँबाट पनि ल्यापटप वा डेस्कटप सञ्चालन गर्न सक्नुहुन्छ ।

तर यो वायर्ड अर्थात तारसहितको माउसको मामला फरक हुन्छ । यसमा ल्यापटप वा डेस्कटपमा नै लिएर बस्नु पर्छ । कहिलेकाहीँ यो कष्टप्रद देखिन्छ । त्यसैगरी, वायरलेस माउस चलाउन ब्याट्री चाहिन्छ, जबकि तारमा त्यस्तो हुँदैन ।

फलत : तपाईंको लागि उत्तम छनोट के हो भन्नेमा यो तपाईंको आवश्यकतामा निर्भर गर्दछ । यदि तपाईं धेरै गेमिङ वा डेक्सटप सम्बन्धी सम्पादनको काम गर्नुहुन्छ भने, तपाईंको लागि वायर्ड माउस एक राम्रो विकल्प हो । जबकि एक वायरलेस माउस आराम र तारको झन्झट नचाहनेको लागी राम्रो हुनेछ । त्यस्तै वायरलेस माउसको मूल्य तारसहितको माउसको भन्दा निकै उच्च हुन्छ र यो विभिन्न कम्पनी अनुसार तलमाथि हुन सक्छ । -एजेन्सिहरुको सहयोगमा

# १२ बुँदे घोषणापत्र जारी गर्दै अन्तर्राष्ट्रिय बालसाहित्य सम्मेलन सम्पन्न

काठमाण्डौ । नेपाल प्रज्ञा प्रतिष्ठान, नेपाल बालसाहित्य समाज र रूम टु रिडको संयुक्त आयोजनामा नेपाल प्रज्ञा प्रतिष्ठान, काठमाण्डौमा २ दिनसम्म अन्तर्राष्ट्रिय बालसाहित्य सम्मेलन "बालहित, बालसिर्जना र बालबालिकाको शैक्षिक, साहित्यिक र सिर्जनात्मक विकासको पक्षमा उभिने, बालसाहित्यको विकासको लागि स्थानीय, क्षेत्रीय तथा वैश्विकस्तरमा व्यक्तिगत वा संस्थागत समन्वय गरी सहकार्य गर्ने कार्यलाई निरन्तरता दिने, एक-अर्काका देशमा वा विश्वमा कतै पनि प्रकाशित आफ्ना तथा अन्य सर्जकका अब्बल सिर्जनालाई एक-अर्कामा पुर्याउने कार्यमा अग्रसर रहने, एक-अर्काका देशमा रहेका शैक्षिक प्रतिष्ठानका पाठ्यक्रम तथा शोधकार्यमा एक-अर्काको बालसाहित्य पनि समाविष्ट होस् भन्ने हेतुले विशेष पहल गर्ने, बालसाहित्यका सर्जकहरूको जायज र कानूनसम्मत हक हित र अधिकारको हननका कुनै पनि घटना घट्न आएमा सर्जकसँग एकबद्ध भई उभिने र त्यस्ता निन्दनीय घटनाको अन्तर्राष्ट्रियस्तरमै विरोध गर्ने, आ-आफ्ना देशका बालबालिकाका हक, हित र अधिकार हनन हुन पुगेको थाहा हुन आएमा एकबद्ध भै त्यस्ता घटनाको विरूद्धमा उभिने" लगायतका १२ बुँदे घोषणापत्र जारी गर्दै सम्पन्न भएको छ ।

उक्त सम्मेलनको उद्घाटन सत्र नेपाल प्रज्ञा प्रतिष्ठानका उपकुलपति एवम् सम्मेलन आयोजक समितिक संयोजक विमलकृष्ण श्रेष्ठको सभाध्यक्षता एवम् नेपाल प्रज्ञा प्रतिष्ठानका कुलपति भूपाल राईको प्रमुख आतिथ्यतामा सम्पन्न भएको थियो । सम्मेलनमा सहभागी प्रमुख अतिथि, अतिथिगण, देश विदेशका सहभागीहरू सबैलाई आयोजक संस्थाहरूको तर्फबाट नेपाल बालसाहित्य समाजका अध्यक्ष प्रमोद प्रधानले स्वागत गर्दै कार्यक्रमको उद्देश्यमाथि प्रकाश पारे । सम्मेलनको सफलताको कामना गर्दै अतिथिहरू प्रा.रामकुमार पाण्डे, रूम टु रिडका कन्ट्री डाइरेक्टर पुषकर लाल श्रेष्ठ, कामपाका प्रमुख कार्यकारी अधिकृत प्रदिप परियार, जापान, डेनमार्क, भारत, चीन, बंगलादेश, श्रीलङ्का, मलेशिया, नेदरल्याण्ड, दक्षिण कोरिया र भुटानका प्रतिनिधि अतिथिहरूलगायतले शुभकामना मन्तव्य व्यक्त गरेका थिए ।

सम्मेलनको पहिलो दिनमा देश विदेशका सहभागीहरूमध्ये बंगलादेश, जापान, भारत, चीन, नेपाल, दक्षिण कोरियाका गरी ८ जना प्रतिनिधिहरूले ८ वटा कार्यपत्र प्रस्तुत गरेका थिए । सोही दिनको दोस्रो भाग अन्तर्गत बालसाहित्य, किशोर साहित्य, पठन संस्कृति सम्बन्धीको प्रस्तुतिकरण र छलफलमा नेपाल, भारत, बंगलादेश र चीनका गरी ८ जना प्रतिनिधिहरूले गहन छलफल र वस्तुस्थिति, समस्या, समाधानका उपायहरू, चुनौती विषयमा एक अर्कामा अनुभव साटासाट गर्ने कार्य भएको थियो ।

सम्मेलनको दोस्रो दिनको पहिलो भाग अन्तर्गत राष्ट्रिय तथा अन्तर्राष्ट्रय बालसाहित्यका विविध पक्षहरू, संस्कृति, पर्यावरण, ऐतिहासिक तथा राजनैतिक परिवेश, वंशानुगत आदि विषयहरू, बालसाहित्यसँग सम्बन्धित अन्य निकायहरूको भूमिका, महत्व, ऐक्यबद्धता आदि विषयमा श्रीलङ्का, भारत, नेपाल, चीन, डेनमार्क, मलेशियाका गरी १४ जना सहभागीहरूले सक्रिय सहभागिता जनाई आ-आफ्नो प्रस्तुतिकरण गरेका थिए ।

कार्यक्रमको दोस्रो भागमा बालसाहित्य र डिजिटल प्रविधि, बालसाहित्य र अनुबाद जस्ता विषयमा २ छुट्टाछुट्टै समूहमा नेपाल, बंगलादेश, भुटान, भारत, श्रीलङ्का र नेदरल्याण्डका गरी ८ जना सहभागी प्रतिनिधिहरूले सक्रिय सहभागिता जनाई समूहगत छलफल गर्ने कार्य रहेको थियो । जसको मोडरेटरमा प्रतिभा पाण्डे र मोनिका लोहनी रहेका थिए । यी सबै प्रस्तुति र छलफलमा अन्य सहभागीहरूले पनि जिज्ञासा राखेका थिए ।

कार्यक्रमको समापन समारोहमा आयोजक समितिको तर्फबाट सबैलाई नेपाल प्रज्ञा प्रतिष्ठानका सदस्य सचिव डा. धन प्रसाद सुवेदीले कृतज्ञता ज्ञापन गरेका थिए । सोही समारोहमा प्रमुख अतिथि, अतिथिहरू, विदेशी सहभागी प्रतिनिधिहरूलाई मायाको चिनो र सम्पूर्ण सहभागीहरूलाई प्रशंशापत्र वितरण गरिएको थियो ।

उक्त सम्मेलनलाई भव्य रूपमा सफल पार्न काठमाण्डौ महानगरपालिका, अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज, पहिलो पाईला, एसभिए, द एशिया फाउण्डेशन, कथालयजस्ता संस्थाहरूले सहआयोजकको भूमिका खेलेका थिए भने सहयोगी संस्थाहरू रिड नेपाल, नेशनल ट्रष्ट फर नेचर, परिचय प्रकाशन, भूँडिपुराण प्रकाशन, बिएसपी, कोपिला किताव, बुक आर्ट नेपाललगायत संस्थाको सहयोग र समर्थन रहेको थियो ।

उक्त भव्य सम्मेलनमा नेवासासका १३० जना आजीवन सदस्यहरूलगायत आयोजक संस्था, सहआयोजक संस्था र सहयोगी संस्थाहरूका तर्फबाट व्यापक सहभागिता रहेको थियो भने भारतबाट ८, बंगलादेशबाट ५, श्रीलङ्काबाट ५, चीनबाट ७, दक्षिण कोरियाबाट १, जापान, डेनमार्क, नेदरल्याण्ड र मलेशियाका गरी कूल ३१ जना विदेशी साहित्यकारहरूको सहभागिता रहेको थियो ।- राजुराम मुनंकर्मी

# जनस्वास्थ्यको मूल्यांकनमा मध्यपुर थिमि प्रथम

भक्तपुर, असोज ८

मध्यपुर थिमि नगरपालिका आर्थिक वर्ष २०८०/०८१ मा सञ्चालित स्वास्थ्य कार्यक्रमको सूचांकको आधारमा गरिएको मूल्यांकनमा प्रथम भएको छ । जिल्ला जनस्वास्थ्य कार्यालय भक्तपुरले आयोजित वार्षिक समिक्षा गोष्ठी एवम् योजना तर्जुमा कार्यक्रमका अवसरमा गरिएको मूल्यांकनमा मध्यपुर थिमि प्रथम भएको हो ।

जनस्वास्थ्य कार्यालयले जिल्लाभरीका पालिकाको स्वास्थ्य शाखा, सरकारी अस्पताल, नीजि अस्पताल एवम् स्वास्थ्य केन्द्रको वार्षिक प्रगती वितरण मूल्यांकन गर्ने क्रममा मध्यपुर थिमि नगरपालिकाको स्वास्थ्य शाखा प्रथम भएको हो ।

जनस्वास्थ्य कार्यालयले सोमवार र मंगलवार गरी दुई दिन वार्षिक प्रगती समिक्षा तथा योजना तर्जुमा गोष्ठी आयोजना गरेको थियो । सोही गोष्ठीमा जिल्लाका चार वटा पालिकाको स्वास्थ्य शाखा, नगर अस्पताल, स्वास्थ्य चौकी, नीजि स्वास्थ्य संस्था एवम् अस्पताल र सरकारी अस्पतालले प्रगती विवरण पेश गरेका थिए ।

सो प्रगती विवरण आधारमा गरिएको मूल्यांकनमा मध्यपुर थिमिको स्वास्थ्य शाखा प्रथम भएको जनस्वास्थ्य कार्यालयका प्रमुख शान्तिराम खतिवडाले बताउनुभयो । समिक्षामा भक्तपुर नगरपालिका, सूर्यविनायक नगरपालिका र चाँगुनारायण नगरपालिका संयुक्तरुपमा द्वितिय भएको खतिवडाले जानकारी दिनुभयो ।

# एरिकाको उस्तै भव्य स्वागत

काठमाडौं । एक वर्षमा करातेकी एरिका गुरुङले त्यस्तै भव्य स्वागत पाएकी छिन् । चीनमा आइतवार सम्पन्न २०औं सिनियर एकेएफ च्याम्पियनसिपमा ऐतिहासिक रजत पदक जितेकी एरिका मंगलवार स्वदेश आइपुग्दा त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा गत वर्षकै जस्तो स्वागत पाएकी हुन् ।

राष्ट्रिय खेलकुद परिषद् (राखेप) का सदस्य सचिव टंकलाल घिसिङ, कराते प्रशिक्षक, खेलाडी, पदाधिकारी , खेलप्रतिले एरिका सहित टोलीलाई विमानस्थलमा स्वागत गरेका थिए ।

गत वर्ष चीनमा नै भएको १९ औं एसियाली खेलकुद (एसियाड) मा पनि एरिकाले एतिहासिक रजत पदक नै जितेर फर्कदा पनि भव्य स्वागत भएको थियो । यसपटक ६८ केजी माथीको तौल समूहको फाइनलमा भियतनामकी एनगोवान नुगेनले एरिकालाई ६-० ले स्तब्ध भएकी थिइन् ।

एरिकाले प्राप्त गरेको रजत ऐतिहासिक हो। एसियन कराते फेडरेसनले आयोजना गर्ने एसियन च्याम्पियनसिपमा नेपालले जितेको यो पहिलो पदक हो। यसअघि कुनैपनि नेपाली खेलाडीले यो च्याम्पियनसिपमा पदक जिन सकेको थिएन ।

च्याम्पियनसिपमा एरिकाको यात्रा सानदार रह्यो ।शुक्रबार लगातार तीन बाउट जितेर एरिकाले फाइनलको यात्रा तय गरेकी थिइन् । उनले प्री क्वाटरफाइनलमा फिलिपिन्सकी इसाबेल ब्रिटोलाई ४-० ले, क्वाटरफाइनलमा काजकिस्तानकी सोफया बेरूत्सलेभा र सेमिफाइनलमा थाइल्याण्डकी केवलिन सोडगलिनलाई सहजै ८-० ले हराउँदै फाइनलमा स्थान बनाउँदै कम्तीमा रजत पदकका गरेकी थिइन् ।

१९ औं एसियाडको फाइनलमा एरिका काजकिस्तानकी सोफयासँग हारेकी थिइन् । यसपटक भने सोफयालो चुनौतीलाई एरिकाले क्वाटरफाइनलमा नै पन्छाएकी थिइन्। एसियाडमा करातेमा रजत पदक जित्ने पनि एरिका पहिलो नेपाली हुन् ।

# च्याम्पियन नेपाल पुलिस क्लबको भव्य स्वागत

काठमाडौं । माल्दिभ्समा सम्पन्न काभा महिला क्लब भलिबल च्याम्पियनसिपको उपाधि जितेको नेपाल पुलिस क्लब सोमबार स्वदेश फर्केको छ । टोलीलाई त्रिभुवन विमानस्थलमा भव्य स्वागत गरिएको छ ।

पहिलो पटक आयोजना भएको काभा महिला भलिबल क्लब च्याम्पियनसिपको शनिबार भएको फाइनलमा पुलिसले उज्बेकिस्तानको हुमो भलिबल क्लबलाई ३-० को सोझो सेटमा पराजित गर्दै उपाधि जितेको हो ।

मालेस्थित सोसियल युथ सेन्टरमा भएको फाइनलमा पुलिसले हुमोलाई २५-१६, २५-२२, २५-२३ ले पराजित गर्दै उपाधि जितेको थियो ।

६ टोली सहभागि प्रतियोगितामा पुलिसले अपराजित रहँदै उपाधि जित्ने क्रममा ६ खेल नै जित्यो । लिग चरणमा पाँचवटै खेल जितेर शीर्षमा रहेको पुलिसले फाइनल समेत जितेको हो ।

पुलिसले लिग चरणमा हुमोसहित, श्रीलंकाको श्रीलंका एयर फोर्स र ताजकिस्तानको डाइमेड भलिबल क्लबलाई समान ३-० ले पराजित गरेको थियो भने माल्दिभ्सको माल्दिभ्स लिस क्लबलाई ३-१ को सेटमा पराजित गरेको थियो ।

विजेता टोलीलाई प्रहरीका अधिकृतहरुले विमानस्थल परिसरमा ब्याण्डबाजा, पुष्पगुच्छा, खादा र मालाले स्वागत गरे । साथै खेलाडीहरुलाई फूल र बेलुनले सजाइएको प्रहरी भ्यानमा राखेर गन्तव्यतर्फ पुऱ्याइएको थियो ।

## सहकारी.....

निर्देशनमा राष्ट्रिय सहकारी बैंकको खर्चमा सहकारी विभागका तत्कालीन रजिस्ट्रारलाई भियतनाम र बेल्जियम भ्रमण गराएको सन्दर्भमा खर्च भएको रकम सम्बन्धितबाट असुल उपर गर्ने स्पष्ट उल्लेख गरिएको,' संसदीय समितिको प्रतिवेदनमा छ । २०६६ देखि २०६८ सम्म राष्ट्र बैंकका कर्मचारी बोलाएर १ सय ३५ सहकारी संस्थाको सघन अनुगमन गरेको प्रतिवेदन सहकारी विभागले दराजमा थन्क्याएर राख्यो । प्रतिवेदनले औंल्याएको कमजोरी सुधारका लागि विभागले कुनै कदम चालेन । तर, त्यसपछि पनि सहकारी विभागको नेतृत्वबाट गैरव्यावसायिक अभ्यास हुँदै आएको देखिन्छ ।

२०६६ मा भएको अनुगमन क्रममा सहकारी संस्था पूर्णरूपमा जोखिममा रहेको औंल्याउँदा पनि संस्था सुधारमा कदम चाल्नुको सट्टा काठमाडौं जिल्ला कार्यक्षेत्र भएका सहकारीलाई २०६९ मा आएर भक्तपुर र ललितपुर जिल्ला कार्यक्षेत्र थप गरिदिएको देखिन्छ । जुन सहकारी संस्थाले अहिले हजारौं बचतकर्ताको रकम अपचलन गरेर समस्याग्रस्त घोषणा भएको छ । यो प्रतिनिधि घटनाले सहकारी संस्थाको बचत रकम दुरुपयोगमा राज्य संयन्त्रको अन्देखा मात्रै नभएर साथ नै रहेको भन्न सकिन्छ ।

सहकारी विभागको माग बमोजिम भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्रालयले गत आवमा सहकारी संस्था अनुगमनका लागि भन्दै विज्ञ जनशक्ति पठाइदिन राष्ट्र बैंकलाई आग्रह गरेको थियो । सोही अनुसार राष्ट्र बैंकले तीन जना विभागलाई उपलब्ध गराए पनि १९ संस्थाको मात्रै अनुगमन गरेर फिर्ता पठाएको थियो । जसमध्ये वित्तीय कारोबार नै नहुने केन्द्रीय मह, जुनार, कफी जस्ता संघ अनुगमनमा अलमल गरेको थियो ।

सहकारी संस्था समस्यामा उदासीन विभागको नेतृत्वले नै सहकारीको कार्यक्षेत्र विस्तारमा भने उदारता देखाएको देखिन्छ । 'सहकारीको कार्यक्षेत्र र सेवा केन्द्र विस्तार रजिस्ट्रारहरू डा. टोकराज पाण्डे र लिलाप्रसाद शर्माको कार्यकालमा बढी भएको देखिन्छ । विस्तार भएका २७ मध्ये पाण्डेले १२ र शर्माले ६ वटालाई स्वीकृति दिएका छन्,' प्रतिवेदनमा छ । सहकारीमा लाखौं जनताको अर्बौं रुपैयाँ बचत संकटमा परिरहेको छ । 'सहकारी ऐन अनुसार देशका सहकारीको नियमन र सुपरीवेक्षण गर्ने कानुनी जिम्मेवारी पाएको सहकारी विभागबाट संस्था दर्ता स्वीकृति, विनियम स्वीकृति तथा संशोधन संस्थाको कार्यक्षेत्र विस्तार, संस्थाको सम्पत्ति खरिद एवं अनुगमन क्रममा जोडिएका विकृति र देखिएका कैफियत कार्यान्वयन तथा कारबाहीको अभाव, विभागको अनुरोधमा राष्ट्र बैंकले पठाएका कर्मचारी फिर्ता गरिएको सम्बन्धी विषयमा प्रश्न उठिरहेका छन्,' संसदिय छानबिन विशेष समितिले प्रतिवेदनमा उल्लेख गरेको छ ।

यति मात्रै नभई नेपालको सहकारी क्षेत्रले 'नक्कली दृष्टान्त' को महामारी भोगिरहेको समितिको निष्कर्ष छ । 'विवाह नक्कली, अंशबन्डा नक्कली, पुनः विवाह नक्कली, साधारणसभा नक्कली, प्रतिवेदन नक्कली, सेयर सदस्य नक्कली, ऋणी नक्कली, खाता नक्कली, लेखापरीक्षण प्रतिवेदन नक्कली, आश्वासन नक्कली, बचनबद्धता नक्कली र सिंगो कार्यप्रणाली नक्कली । सहकारी होइन, सहकारी विपरीत, कानुन विपरीत र इमान विपरीतका कार्य यत्रतत्र अभ्यासमा रहेका छन्,' प्रतिवेदन बुझाउँदा समिति सभापति सूर्य थापाले प्रतिनिधिसभामा भनेका थिए, 'तर, यस्तो परिस्थिति सिर्जना हुँदा समेत सहकारीलाई इजाजत दिने राज्य संयन्त्र र नियमन गर्ने अधिकार पाएको सहकारी विभाग भने 'चीर निद्रा' मा पुगेको थियो ।'

सहकारी संस्था अनुगमन सम्बन्धमा सहकारी विभागले दोहोरो भूमिका खेल्दै आएको विगतदेखि नै देखिन्छ । सहकारी ऐन २०७४ पछि सहकारी संस्थाहरूको नियमन दायरा तीन तहको सरकारमा बाँडफाँट भएको छ । सहकारी ऐन २०७४ को दफा ९५ को उपदफा ९७ तथा सहकारी नियमावलीको नियम ७२ अनुसार विभागका रजिस्ट्रार वा रजिस्ट्रारबाट अधिकार प्राप्त अधिकारीले ५० करोड रुपैयाँभन्दा बढी कूल सम्पत्ति भएका कुनै पनि सहकारीको जुनसुकै बखत निरीक्षण तथा हिसाब जाँच गर्न, गराउन सक्ने व्यवस्था छ । तर, सहकारी विभागलाई कुनै प्रश्न गर्दा आफ्नो नियमन दायरामा नभएको बताउने अनि सबैखालका कार्यक्षेत्र र कारोबार भएका सहकारीलाई जुनसुकै बेला अनुगमन टोली पठाइ अनुगमन गराउँदै आएको छ ।

समितिको अध्ययन प्रतिवेदन अनुसार सहकारी संस्थामा अनुगमनको अवस्था दयनीय देखिन्छ । ३१ हजारभन्दा धेरै सहकारी संस्था भएको देशमा मुस्किलले वर्षमा औसत ५० सहकारीको पनि अनुगमन हुने गरेको देखिँदैन । पछिल्लो एक दशकमा सहकारी विभागबाट भएको सहकारी संस्था अनुगमन विवरण हेर्दा नगन्य मात्रै हुने गरेको देखाउँछ । आर्थिक वर्ष २०७३/७४ मा ६८ सहकारी अनुगमन भएको थियो । २०७१/७२ यता अनुगमन विवरण हेर्दा हरेक वर्ष ५० सहकारी संस्थाको पनि अनुगमन हुन सकेको छैन ।

सहकारी ऐन २०४९ ले बैंकिङ कारोबार गर्ने सहकारी संस्थाले नेपाल राष्ट्र बैंकबाट स्वीकृति लिनुपर्ने व्यवस्था गरेको थियो । २०७४ मा आएको सहकारी ऐनले उक्त व्यवस्था समेत हटाएर सहकारी संस्थाले निर्वाद वित्तीय कारोबार गर्ने र वित्तीय कारोबार नियमन गर्ने संस्था नै नहुने व्यवस्था भयो । पटक-पटक भएका अध्ययनबाट पछि हट्दै सहकारी ऐन २०७४ मा बचत तथा ऋण कारोबार गर्ने सहकारीको नियमन गर्ने व्यवस्था नआएको तर त्यसभन्दा अघि भएका अधिकांश सहकारी अध्ययन सम्बन्धी प्रतिवेदन बेवास्ता गरेको देखिन्छ ।

सरकारले २०६१ सालमै तत्कालीन कृषिमन्त्री होमनाथ दाहालको अध्यक्षतामा उच्चस्तरीय सहकारी क्षेत्र सुधार सुझाव समिति गठन गरेको थियो । सात सदस्यीय समितिमा केशवप्रसाद बडाल, दीपकप्रकाश बास्कोटा लगायत सदस्य थिए । नेपाली कांग्रेस र नेकपा एमालेको राजनीतिमा सक्रिय सहकारी अभियन्ताहरू समेत संलग्न उक्त समितिले भने बचत तथा ऋण सहकारी संस्थाको नियमनका लागि सुझाव दिएको देखिँदैन । व्यावसायिक व्यवस्थापन विकास, संस्थागत वित्तीय पहुँचमा वृद्धि गरी सहकारी व्यवसाय उत्पादनमुखी बनाउनुपर्ने सुझाव समितिले दिएको थियो । सहकारी सिद्धान्त अनुरूप नचलेका बचत तथा ऋण सहकारी संस्थालाई सहकारी सिद्धान्तमा रूपान्तरण गर्ने वा कम्पनीमा रूपान्तरण हुन सक्ने व्यवस्था गर्नुपर्ने सुझाव समितिको थियो ।

यस्तै बचत तथा ऋण सहकारी संस्थाको ऋण असुली कार्यमा सघाउ पुऱ्याउन तिनलाई बैंक तथा वित्तीय संस्थाको ऋण असुली ऐनको संयन्त्रमा समावेश गर्नुपर्ने सुझाव समेत दिइएको थियो । सोही वर्ष अर्थमन्त्री स्तरीय निर्णयबाट राष्ट्रिय सहकारी बैंक र बचत तथा ऋण सहकारी संस्थाका कानुनी र संस्थागत व्यवस्था सम्बन्धी अध्ययन गर्न राष्ट्रिय योजना आयोगका तत्कालीन सदस्य डा. युवराज खतिवडाको नेतृत्वमा अर्को अध्ययन समिति गठन गरियो । सूर्य थापा नेतृत्वको संसदीय छानबिन विशेष समितिले पनि ऋण र निक्षेप सीमा तोक्नुपर्ने सुझाव दिएका छ । तर, केही महिना अगाडि मात्रै सम्पत्ति शुद्धीकरण सम्बन्धी केही नेपाल ऐन संशोधन विधेयक मार्फत सहकारी ऐन संशोधन गर्दै निक्षेपमा २५ लाखसम्म तोक्ने प्रस्ताव भए पनि त्यसलाई संसदबाट नै हटाएर पारित भएको थियो ।

२०६९ मा पुनः अर्थ मन्त्रालयका तत्कालीन सहसचिव डा. वैकुण्ठ अर्याल संयोजकत्वमा बचत तथा ऋण कारोबार गर्ने सहकारी संस्था नियमन गर्ने सम्बन्धमा सुझाव समिति गठन भयो । अर्थ मन्त्रालयले गठन गरेको समिति सदस्यमा सुदर्शनप्रसाद ढकाल, केदार न्यौपाने, विजयराज घिमिरे र चेतप्रसाद उप्रेती थिए । समितिले सहकारी संस्थाहरूको लेखापरीक्षण दुरुस्त गर्न लगाउने, अनुगमन, नियमन र कारोबार सुरक्षणसम्बन्धी नियम तर्जुमा गर्ने, व्यक्तिगत बचत सीमा ३० लाखसम्म तोकिनुपर्ने लगायत सुझाव दिएको थियो ।

२०६९ मै समस्याग्रस्त बचत तथा ऋण कारोबार गर्ने सहकारी संस्था छानबिन गर्ने भन्दै मन्त्रिपरिषदले राष्ट्र बैंकका तत्कालीन डेपुटी गभर्नर महाप्रसाद अधिकारी संयोजकत्वमा समिति गठन गऱ्यो । रामकृष्ण सुवेदी, कृष्णप्रसाद देवकोटा, कृष्णराज बीसी, विजयराज घिमिरे, मिनराज कँडेल र दक्ष पौडेल समिति सदस्य थिए । समितिले मौजुदा सहकारी ऐनमा सहकारी संस्थाले बचत तथा ऋण कारोबार गर्न सक्ने सम्बन्धमा भएको प्रावधान अपर्याप्त भएको, सहकारी संस्थाले गर्न सक्ने बैंकिङ कारोबारको भौगोलिक कार्यक्षेत्रको सम्बन्धमा सहकारी ऐन स्पष्ट नभएको, नियमन, सुपरीवेक्षण र स्वनियमन संयन्त्र पर्याप्त र प्रभावकारी नभएको लगायत समस्या औंल्याएको थियो ।

संस्थाहरूको नेतृत्वमा सीमित व्यक्तिको असीमित भूमिका र वर्चश्व रही संस्थागत सुशासन पक्ष कमजोर भएको, व्यक्तिगत बचत सीमा नतोकिएको हुँदा असीमित बचत परिचालन भएको, कतिपय सहकारी संस्था पारिवारिक व्यवसायका रूपमा सञ्चालन गरिएको, संस्थाका सञ्चालक र परिवारका सदस्यले मापदण्ड विपरीत, स्वार्थ बाझिने गरी वित्तीय स्रोत उपयोग गरेको, सहकारी संस्थाले घरजग्गा लगायत क्षेत्रमा गर्न सक्ने कर्जा सीमासम्बन्धी व्यवस्था कार्यान्वयन पक्ष कमजोर रहेको जस्तो समस्या औंल्याएको थियो । उक्त अध्ययन समितिले समस्याग्रस्त सहकारीमा सबै पक्षको सहभागिता हुने गरी अधिकार सम्पन्न व्यवस्थापन समिति गठन गर्ने, व्यक्तिगत बचतको कुल सीमा तोक्ने, सदस्यहरूको बचत हिनामिना गर्ने, बेहिसाब र अनियमितता गर्ने संस्थाका पदाधिकारीलाई कारवाही गर्ने, सञ्चालक, कार्यकारी प्रमुख र लेखा समिति सदस्यहरू एकाघर परिवारबाट नहुने व्यवस्था गर्ने जस्ता सुझाव दियो । सञ्चालक समितिका कुनै पनि व्यक्ति कार्यकारी पदमा रहन नपाउने व्यवस्था गर्ने, ५० करोड रुपैयाँभन्दा बढीको कारोबार गर्ने सहकारी संस्थाहरूको विशेष लेखापरीक्षण गराउने सुझाव दिए पनि ती सुझाव कार्यन्वयन भएनन् । अहिले तिनै समस्याले सहकारी क्षेत्र संकटपूर्ण अवस्थामा पुगेको छ ।

सहकारी समुदायमा आधारित, सदस्य केन्द्रित र सदस्य नियन्त्रित हुनुपर्नेमा केही व्यक्तिको वित्तीय कम्पनी जस्तो हुन पुगेपछि सहकारी सञ्चालकहरूको एउटा वृत्तले सर्वसाधारणमा रहेको बुझाइको यही कमजोरीमा टेक्दै सहकारीबाट त्यसको गलत फाइदा उठाउनेतर्फ लागेको कार्यदलको निष्कर्ष थियो । कार्यदलले सुदूरपश्चिमका सहकारीले सुदूरपूर्वमा गएर सहकारी कारोबार सञ्चालन गरेको कुरालाई उदाहरणका रूपमा चित्रित गरेको छ । कार्यदलले सहकारी सञ्चालकहरूबाट भएका गल्ती, कमजोरी र लापरबाहीलाई औंल्याएको छ । सञ्चालनमा पहिले लापरबाही भएका सहकारीहरू नै पछिल्लो समयमा समस्याग्रस्त बन्दै गएको स्थितिलाई कार्यदलले उदाहरणका रूपमा चित्रित गरेको छ ।

कतिपय सहकारी सञ्चालकले सहकारी ऐन र नियमावलीमा रहेको कानुनी छिद्र पहिल्याउँदै त्यसको दुरुपयोग गरेको देशव्यापी सञ्चालन अनुमति लिई ठूलो परिमाणमा बचत संकलन गरी त्यसलाई आ-आफ्ना नातेदार वा व्यावसायिक साझेदार वा व्यापारिक कम्पनीहरूमा लगानी गर्ने जस्तो गैरसहकारी हर्कत गरेको कार्यदलको निष्कर्ष थियो ।

सबै सहकारीले तीन महिनाभित्र आ-आफ्नो स्थितिको श्वेतपत्र जारी गर्ने र बचत फिर्ता गर्न नसकेका सहकारीले बचत फिर्ता कार्ययोजना समेत पेस गर्ने, कर्जा असुली न्यायाधीकरण तथा कर्जा सूचना केन्द्र स्थापना गर्ने सुझाव दिएको थियो । सहकारी सञ्चालक तथा कर्मचारीहरूको सम्पत्ति विवरण संकलन र अभिलेखीकरण गर्ने, ५० करोडभन्दा बढीको कारोबार गर्ने सहकारी निरीक्षणको जिम्मा राष्ट्र बैंकले लिने सुझाव समेत दिएको थियो ।

'सहकारीमा साधारणसभा हुनुभन्दा अघिल्लो दिन सबैको सदस्यता खारेज गरिदिने, साधारणसभा गर्ने र भोलिपल्ट सबैको सदस्यता नवीकरण गरिदिनेसम्म हुने रहेछ,' पूर्वअर्थमन्त्री आचार्यले भनेका छन्, 'म अर्थमन्त्री हुँदा भएको अध्ययनमा सहकारीमा बाबु अध्यक्ष, छोरो सचिव, बुहारी कोषाध्यक्ष भएको पनि पाइयो । पूरै पारिवारिक सञ्चालक समिति बनेको पनि पाइएको थियो ।' पूर्वअर्थमन्त्री आचार्यले भनेको विकृत सहकारीमा अहिले पनि कायम छ । त्यतिबेला नै निश्चित करोडभन्दा माथिको सहकारीलाई राष्ट्र बैंकको नियमानुसार निगरानी अनुगमन गर्नुपर्ने निर्देशन दिएको आचार्यले बताएका छन् ।

## शिक्षा...

भक्तपुरलाई नजिकबाट नियाल्ने अवसरको लागि धन्यवादज्ञापन गर्दै सभापति थापाले विश्वविद्यालय विधेयक शिक्षा, स्वास्थ्य तथा सूचना प्रविधि समितिमा प्रस्तुत भए पछि समितिले आवश्यक छलफल गरी शिघ्र संसदमा प्रस्तुत गर्ने जानकारी दिए । नगरपालिकाबाट सञ्चालित कलेजहरूमा काठमाडौं उपत्यका बाहिरबाट अध्ययन गर्न आएका विद्यार्थीहरूलाई राम्रो सुविधा उपलब्ध गराएकोमा कृतज्ञता व्यक्त गर्दै उनले ख्वप विश्वविद्यालयले कम शुल्कमा एमबीबीएस अध्ययन गराउने विषयले सभासद्हरू समेत उत्साहित भएको बताए ।

ख्वप विश्वविद्यालय सम्बन्धनको विषयमा ढिलाइ भएकोमा आशंका व्यक्त गर्दै सभापति थापाले नागरिकलाई सुलभ र गुणस्तरीय उच्च शिक्षा अध्ययन गराउने उद्देश्यले स्थापना हुने ख्वप विश्वविद्यालय विधेयक संसदबाट छिटो पारित गर्ने विषयमा आफूहरू सकारात्मक रहेको बताए ।

नेपाल मजदुर किसान पार्टीका सचिव एवम् सांसद प्रेम सुवालले ख्वप विश्वविद्यालय विधेयक संसदबाट पारित गर्न र नेपाल ट्रष्टको नाममा रहेको सल्लाघारीको १०८ रोपनी जग्गा प्राप्तिको लागि भक्तपुर नपाले यसअघि पनि धेरैपटक ताकेता गरिसकेको स्मरण गराएका थिए । सल्लाघारीको १०८ रोपनी जग्गा स्थानीय जनताकै जग्गा भएको बताउँदै उनले ख्वप विश्वविद्यालयलाई जनताको विश्वविद्यालयको रुपमा सञ्चालन गर्ने उद्देश्यले सञ्चालन गरिनेछ र देशभरिका विद्यार्थीहरूले सस्तोमा गुणस्तरीय उच्च शिक्षा हासिल गर्ने अवसर मिल्ने बताए ।

भक्तपुर नगरपालिकाका प्रमुख प्रजापतिले भक्तपुर नगरपालिकाले सञ्चालन गर्ने ख्वप विश्वविद्यालयको विधेयक पारित गर्न र भक्तपुर नपा वडा नं. १ सल्लाघारीस्थित १०८ रोपनी जग्गा ख्वप विश्वविद्यालय स्थापना गर्न भक्तपुर नपालाई उपलब्ध गराउन सभापति थापासमक्ष अनुरोध गरे । सल्लाघारीस्थित उक्त जग्गाको संरक्षणको अभावमा हनुमन्ते खोलाबाट कटान र अतिक्रमणको कारण जग्गाको क्षेत्रफल समेत घटेको तथा उक्त जग्गाको संरक्षण, सम्बर्द्धन र सदुपयोग हुन नसक्दा यसको विभिन्न पक्षबाट दुरुपयोगको सम्भावना समेत बढेको हुँदा भक्तपुर नपाले नेपाल ट्रष्टको सहमतिमा नगरपालिकाको खर्चमा उक्त जग्गाको चारैतर्फ पर्खाल निर्माण र ५ वटा गेटको व्यवस्था गरी संरक्षण गर्दै आइरहेको अवगत गराए । भक्तपुर नपाले वार्षिक ४ करोडभन्दा बढी छात्रवृत्ति, विभिन्न विषयमा पी.एच.डी.सम्म छात्रवृत्ति, शैक्षिक ऋणको व्यवस्था, वडा वडामा शिशुस्याहार सञ्चालन, नगरस्तरीय र वडा वडामा स्तरीय पुस्तकालय व्यवस्था गर्दै आएको बताउँदै उनले कम शुल्कमा चिकित्सा शिक्षा प्रदान गर्ने उद्देश्यका साथ चिकित्सा शास्त्र अध्ययन संस्थानसहित ख्वप विश्वविद्यालय स्थापना गर्न आवश्यक प्रक्रिया अगाडि बढाउन नेपाल सरकारलाई पटक पटक ताकेता गर्दै आएको विषय अवगत गराए ।

उनले नपाबाट सञ्चालित शैक्षिक संस्थाहरुबाट देशका ७७ वटै जिल्लाका ७ हजारभन्दा बढी विद्यार्थीले अध्ययन गर्ने अवसर प्राप्त गरिसकेको पनि सो अवसरमा जानकारी दिए । पूर्व शिक्षामन्त्री मा. देवेन्द्र पौडेलले भक्तपुर नपाले शिक्षामा गरेको काम सराहनीय भएको र थप प्रगतिको लागि शुभकामना दिए । भक्तपुर नपाले गरेको काम ७५३ वटै स्थानीय तहको लागि नमुना बनोस् भन्दै मा. पौडेलले जनतालाई सस्तो र गुणस्तरीय शिक्षा दिने उद्देश्यले सञ्चालन हुने ख्वप विश्वविद्यालय स्थापनाको लागि आफ्नो तर्फबाट आवश्यक पहल गर्ने प्रतिबद्धता व्यक्त गरे । विश्वविद्यालय सञ्चालनको लागि आवश्यक भौतिक पूर्वाधार निर्माणमा भक्तपुर नपाले साह्रै राम्रो काम गरेको बताउँदै उनले भक्तपुर नपा ख्वप विश्वविद्यालय सञ्चालनको लागि सक्षम भएको बताए ।

भक्तपुर नगरपालिकामा भएको भेटपश्चात सभापति थापाले भक्तपुर नपाबाट सञ्चालित ख्वप माध्यमिक विद्यालय, ख्वप कलेज, ख्वप कलेज अफ ल, ख्वप अस्पताल, ख्वप इन्जिनियरिङ कलेज र ख्वप कलेज अफ इन्जिनियरिङको पनि स्थलगत अवलोकन गर्दै त्यहाँको भौतिक अवस्थिति र शैक्षिक विशेषताहरूबारे जानकारी लिएको थियो ।

ख्वप कलेजमा प्राचार्य प्रकाश कुमार श्रेष्ठ, ख्वप कलेज अफ लका प्राचार्य अनिता जधारी, ख्वप अस्पतालमा नि.निर्देशक डा.मजेश प्रताप मल्ल र ख्वप इन्जिनियरिङ कलेज र ख्वप कलेज अफ इन्जिनियरिङमा प्राचार्यहरू ई.सुजन माक तथा सुनिल दुवालले सभापति थापा नेतृत्वको टोलीलाई स्वागत गर्दै कलेज स्थापनाको उद्देश्य, शैक्षिक कार्यक्रम र त्यसको विशेषता, विद्यार्थी संख्या, शुल्क संरचना र कलेजको सेवा तथा सुविधाहरूबारे जानकारी दिएका थिए ।

टोलीले भक्तपुर नपाबाट सञ्चालित जनज्योति पुस्तकालय, भनपाबाट सञ्चालित वडा नं. १ को शिशुस्याहार केन्द्र र ऐतिहासिक भाज्या पुखु र सिद्धपोखरीको पनि अवलोकन गरेको थियो । निरीक्षणमा सभापति अम्मरबहादुर थापासहित देवेन्द्र पौडेल, उर्मिला थेबे, रामप्रकाश चौधरी, लिलादेवी बोखिम, विनिताकुमारी सिंह, ज्ञानुदेवी सुवेदी, समितिका सचिव दशरथ धमला, उपसचिव पुष्पप्रकाश खनाल र शाखा अधिकृत यमुना सुवेदीको उपस्थिति रहेको थियो ।

## मध्यपुर.....

नगरपालिकाले गतवर्ष टोल बस्तीको मौलिक नाम संकलन, अभिलेखीकरण तथा प्रतिस्थापन, शंखधर चोकको भाफल्चा परिसर सुधार, उपभोक्ता समिति गठन गरी गुरु योजना अनुसार शंखधर पार्क निर्माण, थिमि लायकु मूल ढोका निर्माण, धपहिटी परिसर सुधार, नेपाल कोरिया मैत्री नगरपालिका अस्पतालको भौतिक पूर्वाधार विकास, एकीकृत जग्गा विकास कार्यक्रमको ८ स्थानको विस्तृत सम्भाव्यता अध्ययन, दुनेगः पहिरो नियन्त्रण, कुन्डोल हाडोल, ब्राइटर हनुमन्ते सडक सिमांकन तथा स्तरोन्नतीलाई उपलब्धीको रुपमा लिएको छ ।

यसैगरी लोहकिल्थली वडा कार्यालय - धपहिटी - महेन्द्र आ. वि. सडक सिमांकन तथा स्तरोन्नती, निलवाराही चक्रपथ, पंगु देखि यमा सम्म ढुंगा छपाई, धुंची मधुचोक राजकुलो सिमांकन, विष्णुकुन्डोल सार्वजनिक जग्गा सिमांकन, भाँगु पहिरो नियन्त्रण, कुन्डोलभगवती - खरिबोट बाटो सिमांकन तथा स्तरोन्नती, बुद्धविहार पश्चिम पहिरो नियन्त्रण, सार्वजनिक विद्यालयका विद्यार्थीहरुका लागि केन्द्रीय चमेना गृह निर्माणको थालनीलाई पनि नगरपालिकाले उपलब्धीको रुपमा लिएको नगरप्रमुख सुरेन्द्र श्रेष्ठले जानकारी दिए ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमिTIMES

# ओस्करमा भारतको प्रतिनिधित्व गर्दै 'लापत्ता लेडिज'



काठमाडौं । सन् २०२५ को ओस्कार अवार्डका लागि फिल्म 'लापत्ता लेडिज'ले भारतको प्रतिनिधित्व गर्ने भएको छ ।

फिल्म फेडेरेसन अफ इन्डयाले सोमबार २९ फिल्मको सूचीबाट 'लापत्ता लेडिज' ओस्करका लागि पठाउने निर्णय सार्वजनिक गरेको हो । किरण रावको निर्देशन रहेको यो फिल्म गत मार्चमा प्रदर्शनमा आएको थियो । भारु ५ करोडको लगानीमा बनेको यो फिल्मले समालोचक र दर्शक सकारात्मक प्रतिक्रिया पाएको थियो ।

फिल्मको ब्यापार भने मध्यम थियो । भारतीय मिडियाहरूकाअनुसार यस फिल्मले घरेलु र विदेशसमा २५ करोड भारु व्यापार गरेको छ ।

सोसल कमेडी ड्रामामा आधारित यस फिल्मले समाजमा महिलाको पहिचानको मुद्दा उठान गरेको छ । भारतीय मिडियाका अनुसार 'एनिमल', 'अत्तम' जस्ता फिल्मलाईपछि पार्दै 'लापत्ता लेडिज' ओस्कारका लागि चयन भएको हो ।

यस फिल्ममा नितांशी गोयल, प्रतिभा रत्न, स्पर्श श्रीवास्तव, छाया कदम, रवि किशन लगायतको अभिनय छ ।

'लापत्ता लेडिज'को निर्माता अमिर खान हुन् । उनी निर्माता रहेको तीन फिल्म 'लगान', 'तारे जमिन पर' र 'पिप्ली लाइभ' यसअघि भारतको प्रतिनिधित्व गरेरे ओस्करमा पठाइएको थियो । उनका तीनै फिल्म ओस्कर अवार्ड जित्न असफल रहे । अमिर खानले चौथो पटक पनि अवसर पाएका छन् । तर, यस फिल्ममा भने उनको अभिनय छैन ।अब 'लापत्ता लेडिज' को ओस्कारको यात्रा कहाँसम्म पुग्छ ? भारतीय फिल्मप्रेमीका लागि चासोको विषय बनेको छ ।

रवि किशनले भने 'जीवनको ठूलो क्षण'

फिल्मका अभिनेता रवि किशनले 'लापत्ता लेडिज' ओस्कारका लागि चयन भएको खुसी व्यक्त गरेको छन् । उनले यो घटना आफ्नो जीवनको विशेषमध्येको एक भएको बताए ।

उनले भारतीय मिडिया आजतकसँगको अन्तर्वार्तामा भनेका छन्, 'मेरो लागि यो सपना साकार भएको क्षण हो । यो सबैभन्दा ठूलो सम्मान हो । मैले कहिल्यै सोचेकी थिइनँ । यो मेरो जीवनको सबैभन्दा राम्रो र सबैभन्दा ठूलो खबर हो ।'

# चर्चामा चलचित्र आँखाको ट्रेलर : भुइँमान्छेको कथा



काठमाडौं । फरक कथावस्तुमा तयार भएको नेपाली चलचित्र 'आँखा'को ट्रेलर सार्वजनिक भएको छ । म्युजिक नेपालको युट्युब च्यानलबाट सार्वजनिक भएको साढे २ मिनेट लामो ट्रेलरले बागमती नदी किनारको सुकुम्बासी बस्तीमा बस्दै आएका मानिसको कथालाई सिनेमाले भावनात्मक रूपमा उठान गरेको छ । असोज ११ गतेबाट प्रदर्शनमा आउन लागेको चलचित्र 'आँखा' लाई जौन योन्जनले लेखन तथा निर्देशन गरेका हुन् । यसअघि सार्वजनिक टिजर र गीतलाई उत्कृष्ट प्रतिक्रिया मिल्दा निर्देशक योन्जनले सिनेमाको कथावस्तुलाई संक्षिप्त वर्णन गर्दै ट्रेलरलाई पनि सोहि प्रकृतिले सुन्दर बनाउने प्रयास गरेका छन् । भुइँमान्छेको कथा प्रस्तुत गरिएको ट्रेलरमा फोहोरमा राजनिति र दुई वर्गबिचको खाडल देख्न सकिन्छ ।

चलचित्रमा स्मिता लामिछाने, आरके मेहता, निशा अधिकारी, बुद्धि तामाङ, विजय बराल, सरोज खनाल लगायतका कलाकारहरूको अभिनय रहेको छ । चलचित्रमा मुख्य भुमिकामा स्मिता लामिछाने र आर के मेहता देखिन्छन् । लामिछानेले यसअघि बाह्र सत्ताईस, म राजेश हमाल लगायतका थुप्रै चलचित्रहरुमा अभिनय गरिसकेकी छिन् भने आर के मेहताले यसै चलचित्रमार्फत् डेब्यु गरेका छन् । उनले यो चलचित्रको लागि १५ किलो वजन घटाएका थिए ।

रंगमञ्चमा लामो समय सक्रिय मेहताले शिल्पी थिएटरमा जेसिमो बेटा भर्सन, कोमा, माफिपा लाखे, नारी, के लाग्यो हाल्का ले, एल्लो कमेडी जस्ता थुप्रै नाटकहरु गरेका थिए । उनी 'हारजित' 'वीच', 'जिउँदो आकाश' नाटकका अभिनेता तथा निर्देशक पनि हुन् । उनले इटालीमा एकडेमिया डेल् आर्ते मा फिजिकल थिएटरको डिप्लोमा गरेर त्यही प्रशिक्षण पनि दिएका थिए । इटालीमा पनि उनले धेरै प्रदर्शनहरू गर्नुका साथै नेपालको मण्डला थिएटर, कान्तिपुर फिल्म एकेडेमी, एनएफडीसी, पिफिटमा पनि ओर्कसप दिएका थिए ।

लामा सिनेमाजको ब्यानर तथा ढाका टोपी फिल्म्स, कार्यक्रम नेपाल, साइलेन्ट एक्ट र ट्राइडेन्ट कन्सेप्टको सहकार्यमा यो चलचित्र निर्माण गरिएको हो । सम्पादन कृष्ण भण्डारीले गरेका छन् भने छायाङ्कन आलोक शुक्लाको रहेको छ । सुकुम्बासी बस्तीमा बस्दै आएको घर सम्पतिविहिन दम्पतिले जीविकोपार्जनको लागि गर्नुपरेको संघर्ष र त्योबीचमा उत्पन्न परिस्थितिलाई सिनेमाको कथावस्तु बनाइएको छ ।

# ६०० करोड कमाउने पहिलो हिन्दी फिल्म 'स्त्री २'




काठमाडौं । श्रद्धा कपुर र राजकुमार राव अभिनित हिन्दी फिल्म 'स्त्री २' ले भारतीय बक्स अफिसमा कीर्तिमान रचेको छ । यो फिल्म सर्वकालीन ब्लकबस्टर मात्र बनेन, घरेलु बजारमा ६०० करोड भारु कमाउने पहिलो हिन्दी फिल्म पनि बन्यो ।

बलिउड व्यापार विश्लेषक तरण आदर्शका अनुसार फिल्मले ३९ औं दिनसम्म ६०४.२२ करोड भारु कमाएको छ । आइतबार मात्रै फिल्मले ४.८५ करोड भारु कमायो ।

शुक्रबार 'सिनेमा दिवस'को अवसरमा फिल्मले दर्शकलाई ठूलो संख्यामा हलसम्म तान्न सक्यो । उक्त दिन टिकटको मूल्य ९९ भारु तय थियो । 'स्त्री २' ले शाहरुख खानको अघिल्लो ब्लकबस्टर 'जवान'को कमाइ (५८२ करोड भारु) लाई पनि उछिनेको छ ।

'स्त्री २' ले पहिलो साता ३०७.८० करोड भारु, दोस्रो साता १४५.८० करोड भारु, तेस्रो साता ७२.८३ करोड भारु, चौथो साता ३७.७५ करोड भारु, पाँचौं साता २५.७२ करोड भारु, छैटौं सप्ताहन्तमा १४.३२ करोड भारु कमायो । यो फिल्मले रणवीर कपुर स्टारर 'एनिमल' र शाहरुख खानको 'पठान'को कमाइलाई पनि उछिनेको छ ।

# केटी हराएको "मिसिङ" सूचना



काठमाडौं । पोस्टप्रोडक्सनमा रहेको चलचित्र 'मिसिङ : केटी हराएको सूचना'को पहिलो गीत सार्वजनिक भएको छ । 'हेर्दै जाउँ..' बोलको गीत निर्माणपक्षले आइतबार आज म्युजिक नेपालको युट्युब च्यानलमार्फत सार्वजनिक गरेको हो ।

गीतमा रोहित जोन क्षेत्री र शितुसित बस्नेतको स्वर रहेको छ । शब्द तथा संगीत दीपेन्द्र गौचनको छ । गीतमा संजोगले अचानक भएको भेट, बेठेगान र बेहिसाब जिन्दगी कता जान्छ भन्ने निश्चित नरहेको एक युवक र युवतीको कथा भन्छ । जिन्दगीको यात्राका क्रममा भेटिएका युवा-युवतीलाई जिन्दगीको गन्तब्य नै निश्चित नरहेको भावमा गीत लेखिएको छ ।

सपनामा देखेजस्तो हो कि विपनामा देखेको अभाव नै जिन्दगी हो भन्ने प्रश्न गरेको गीतले समग्रमा जिन्दगी प्रश्नै प्रश्नले भरिएको छ भन्ने बताउँछ । जिन्दगीको उत्तरार्धमा आइपुग्दा पनि यथार्थमा जिन्दगी के हो भन्ने थाहा नहुने गरेको भन्दै बीचमा आउने दुःख, हाँसो, घाम र छाया, मिलन तथा बिछोड किन भन्ने प्रश्न गरेको गीतले समग्रमा जिन्दगी आफैंमा एक आश्चर्य हो भन्ने बताउन खोजेको छ ।

गीतका यिनै भाव बोल्ने भिडियोमा मुख्य कलाकार सृष्टि श्रेष्ठ र नाजिर हुसेन फिचर्ड छन् । दुई साथीबीचको लामो समयपछिको भेटमा हुने खुसी भिडियोमा देखिन्छ । नेपालका तराईमा भिडियो छायांकन भएको भिडियोले पुष्टि गर्छ ।

चलचित्र 'मिसिङ : केटी हराएको सूचना' आगामी कात्तिक ३० गतेबाट प्रदर्शनमा आउँदैछ । चलचित्रको संबादरहित टिजर यसअघि नै सार्वजनिक भइसकेको छ । टिजरले अभिनेता नाजिर र अभिनेत्री सृष्टिबीचको प्रेमलाई दर्शाएको छ । गीतले धोका र बदलाको कथामा सिनेमा निर्माण भएको संकेत गरेको छ । यो चलचित्रको निर्देशन करिब ३२ वर्षअघिको डकु-ड्रामा 'उजेली'का निर्देशक दीपेन्द्र गौचनले गरेका छन् । निर्देशक गौचन स्वयंको स्क्रिप्ट लेखन रहेको सिनेमालाई अमर महर्जनले खिचेका छन् ।

उनी स्वयं निर्माता रहेको सिनेमामा नाजिर र सृष्टिसँगै सञ्जय गुप्ता, राम नारायण ठाकुर, मदन ठाकुर, रिना रिमाल, ललिता देवी मिश्रलगायतको पनि अभिनय छ । नेपालकै ठूलो मल्टिप्लेक्स चेन क्यूएफएक्सका सञ्चालक नकिम उद्दिन कार्यकारी निर्माताको रुपमा रहेका छन् ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

साप्ताहिक

THIMI TIMES WEEKLY




वर्ष १८ | अङ्क १२ | ने.सं. ११४४ | असोज १६ गते बुधबार, २०८१ | 02 Oct. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

# विपद्मा सडकमा देखिएनन् लाखौं सदस्य भएका दल !




काठमाडौं । देशमा राजनीतिक स्वार्थ र निर्वाचनको समय हजारौंको संख्यामा कार्यकर्ता सडकमा उतार्दै आएका दलहरू देशमा आएको बाढी-पहिरोको विपदमा राहत तथा उद्धारमा औपचारिक निर्णय गर्दै विज्ञप्ती निकालेर मौन बसेका छन् । साथै अधिकांश राजमार्ग बन्द भएकै कारण हजारौं यात्रु अलपत्र परेका छन् । यस्तो अवस्थामा दल तथा सत्तामा रहेका नेताहरु र राज्यको सयन्त्र आपतकालीन राहत पुऱ्याउने प्रयासमा समेत देखिएका छन् । अर्को तर्फ देशको सरकार प्रमुख समेत संयुक्त राष्टसंघको महासभामा भाग लिन अमेरिकाको न्युरोकबाट सोमबार बेलुका मात्र नेपाल फर्केका छन् । राष्ट्रिय विपतमा सरकार प्रमुखको दायित्व भनेको देशको आपतमा साथ दिन सम्पूर्ण कार्यक्रम छोडेर फर्कनु पर्ने हो । तर हाम्रा प्रधानमन्त्री अमेरिकी भ्रमणलाई पनि ठट्टामा उडाउने गरेको दृश्य विमानस्थलको भिभिआईपि परिसरमा पत्रकार हरुसँगको भेटमा देखिएको छ । अर्को तर्फ पार्टीका कार्यकर्ताहरू स्वयंसेवकका रुपमा सडकमा देखिएका छन् ।

बाढी-पहिरोले अवरुद्ध सडक खुलाउन सेना, सशस्त्र प्रहरी, नेपाल प्रहरी लागि रहँदा १० औं लाख क्रियाशील सदस्य रहेको दाबी गर्ने नेपाली कांग्रेस, नेकपा एमाले र नेकपा माओवादी केन्द्र विपद्का बेला राहत तथा उद्धार कार्यमा चुकेका छन् । असोज ११ र १२ गते परेको अविरल वर्षाले संघीय राजधानीलगायत विभिन्न जिल्लामा गएको बाढी-पहिरोमा परेर अहिलेसम्म २१७ जनाको मृत्यु भइसकेको छ भने २८ जना बेपत्ता भएका छन् । नेपाल प्रहरीका अनुसार १४३ जना घाइते भएका छन् भने ४ हजार ३३० भन्दा बढीको उद्धार गरिएको छ । त्यस्तै राजधानीमै ३४ जनाको ज्यान गएको अवस्था छ ।

प्रहरीले अविरल वर्षाका कारण विभिन्न स्थानहरूमा बाढी तथा पहिरोले गर्दा सडक अवरुद्ध रहेको र प्रहरी परिचालन भई बाटो खुलाउने प्रयास भइरहेकोले लामो

बाँकी पेज ७ मा

# निकोसेराको सिंगो वस्ती विस्थापनको खतरामा



भक्तपुर । भक्तपुरको मध्यपुर थिमि नगरपालिका निकोसेराको सिंगो वस्ती विस्थापनको खतरामा परेपछि स्थानीय आन्दोलित भएका छन् । मध्यपुर थिमि नगरपालिका वडा नं ९ का स्थानीय पीडितहरु भूमि अधिकार संरक्षण समिति गठन गरी आन्दोलिन भएका हुन् ।

निकोसेराको यो वस्ती मध्यपुर थिमि नगरपालिका वडा नं ९ मा परे पनि यो भक्तपुर नगरपालिका र सूर्यबिनायक नगरपालिकाको सिमानासँग जोडिएको छ । यो वस्ती निकोसेरा सडक (सल्लाघारी दधिकोट चोकदेखि मध्यपुर पुरानो थिमि बाखा बजार पुग्ने सडक) मुख्य सडकको दक्षिणमा पदर्छ । यो वस्तीको उतरमा सडक र दक्षिणमा हनुमन्ते खोला पर्दछ ।

हनुमेन्ते खोला र सडकको विचमा परेको यो वस्तीमा खोला र सडक दुवैको मापदण्डको हिसाव गर्दा ढलान गरेर बनाइएको झण्डै एक सय घरहरु नै भत्काएर विस्थापित हुने खतरामा परेको हो । यो वस्तीको मुख्य निकोसेरा सडक २० मिटरको छ । सडकको मापदण्ड साढे १२ मिटरको छ । अर्को साइटको खोला २० मिटर चौडाइको छ । खोलाको

बाँकी पेज ७ मा

# संस्कृतिकर्मी, कलाकार तथा सांस्कृतिक गुरुहरू सम्मानित




भक्तपुर । नेपाल मजदुर किसान पार्टीका केन्द्रीय सचिव प्रेम सुवालको प्रमुख आतिथ्यमा भक्तपुर नगरपालिकाको आयोजनामा भएको ४५ औं विश्व पर्यटन दिवसको अवसरमा गुन्हीपुन्ही सापारु २०८१ मा प्रदर्शन भएका घिन्ताङघिसी र माक प्याखँ तथा परम्परागत एवम् आधुनिक सांस्कृतिक विधाहरूलाई पुरस्कार तथा प्रमाणपत्र वितरण, भक्तपुरका सांस्कृतिक गुरुहरूको सम्मान तथा पर्यटन सम्बद्ध संघ संस्था, व्यवसायी र सहयोगीहरूलाई सम्मान कार्यक्रम शुक्रबार एक भव्य समारोहबीच सम्पन्न भयो ।

कार्यक्रममा सम्मानित संस्कृतिकर्मी र सांस्कृतिक गुरुहरुलाई बधाईज्ञापन गर्दै सांसद सुवालले भक्तपुरलाई सफा, स्वच्छ र पर्यटकीय गन्तव्यस्थलको रुपमा विकास गर्न नगरबासीहरुलाई सरसफाइबारे सचेत पार्नुपर्ने बताए । भक्तपुर नपाबाट सञ्चालित कलेजमा देशभरिका

बाँकी पेज ७ मा

# सहकारी ठगीमा सत्तारुढ नेतामाथि कारबाहीको सवाल

लेखनाथ दहाल

'सहकारी संस्था बचत रकम संसदीय छानबिन विशेष समिति'को एक सदस्य म पनि थिएँ । प्राप्त कार्यादेशभित्र रहेर समितिले छानबिन प्रतिवेदन बुझाइसकेको छ । प्रतिवेदनकै सिफारिसबमोजिम सहकारीको बचत रकम अपचलनमा संलग्नहरू पक्राउ पर्न थालेका छन् । समितिले गरेको अध्ययनमा ४० भन्दा धेरै सहकारीका सञ्चालकहरू रकम अपचलनमा दोषी देखिएका छन् । सरकारले एकजनालाई पक्राउ गरी अरूबारे मौन बस्नुहुँदैन ।

गोरखा मिडिया प्रालिमार्फत सहकारीको रकम अपचलन प्रकरणमा राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा)का सभापति रवि लामिछाने पनि जोडिनुभएको छ । सोही मिडिया संचालक जिबी राई र पूर्व संचालक छविलाल जोशीलाई पनि कारबाही गर्न समितिले भनेको छ । अहिले जोशी पक्राउ परे, तर जिबी राईको अवस्था सरकारले सार्वजनिक गरेको छैन । रवि लामिछाने त गफ गरेरै हिँड्नुभएको छ । समितिले उहाँलाई पनि कारबाही गर्नु भनेको छ । जिबी राई सहकारीबाट आठ अर्ब रुपैयाँ ठगी गरेको आरोपित हुन् । कुमार रम्तेल पनि जोडिएका छन् ।

हाम्रो मान्यता के हो भने सरकार एउटा बुँदामात्र हेरेर बस्नु भएन । समग्र सहकारीसँग सम्बन्धित विषय हेर्नुपर्छ । ११ सय लामो पृष्ठ प्रतिवेदनमा ४० वटा सहकारीको वित्तीय विश्लेषण सार्वजनिक गरिएको छ । ४० वटा सहकारीमा ८९ अर्ब रुपैयाँ ठगी प्रकरणका ठगहरू को-को हुन ती सबै पात्र कम्पनीलाई कारबाहीको लागि सिफारिस गरिएको छ । कारबाहीमा विभेद गरिनु भएन । सबैलाई अनुसन्धानको दायरामा ल्याउनुपऱ्यो । हामीले जो-जे नाम किटान गरेको छौं, सबैमा सरकारले हात हाल्नुपऱ्यो । कसैलाई काखा कसैलाई पाखा गर्नुभएन । न्यायसम्पादनमा विवाद गरिनु भएन ।

सरकारले आफूनिकटलाई जोगाउन खोजिरहेको छ । सरकारले रवि लामिछानलाई मात्र हेरेर त भएन नि ! ८९ अर्ब रुपैयाँ ठगी भएको छ । ती सबैतिर त हाम्रो ध्यान गएन । रवि र जीबीलाई जोडेर मात्रै अरू बचत फिर्ता हुँदैन । बचतकर्ताको रकम फिर्ता गराउन त सबै सहकारी ठगहरूको चल-अचल सम्पत्ति जफत र बिक्री वितरण गरेर बचतकर्ताको रकम फिर्ता गराउनुपर्छ ।

रवि लामिछानेमाथि पनि अनुसन्धान गर्नुपऱ्यो । सँगसँगै ललितपुरको मितेरी सहकारी लगायत ठगीमा संलग्न पाइएका कांग्रेसका सांसद् धनराज गुरुङमाथि पनि अनुसन्धान थाल्नुपर्छ । उनी सहकारीको रकम अपचलन प्रकरणमा छन् ।

बाँकी पेज २ मा

## सहकारी......

अनुसन्धानबाटै पुष्टि भएको छ । नेकपा (एमाले) का सांसद् एवम् संसदको सार्वजनिक लेखा समितिका सदस्य ऋषिकेश पोखरेलको परिवार नै सहकारी ठगीमा जोडिएको अनुसन्धानले पुष्टि गरेको छ ।

झण्डै २६ अर्ब रुपैयाँ रकम अपचलनमा त नेपाली कांग्रेसका केन्द्रीय नेताहरूको संलग्नता देखिन्छ । एमालेका पनि धेरै नेता/कार्यकर्ता जोडिएका छन् । अन्य पार्टीका पनि छन् । हामीले नाम नै किटान गरेर भनिसकेका छौं । त्यसैले; सरकार अब इमान्दारिताका साथ बचत फिर्ता गराउने योजनामा लाग्नुपर्‍यो । अपराध कर्मका आधारमा हत्कडी लगाउनुपर्‍यो । एउटालाई लखेटेजस्तो गर्ने, हत्कडी लगाउनुपर्ने मानिसहरूलाई अँगालो हालेर राखेजस्तो सरकारको रवैया देखिन्छ । यसको अर्थ के हो भने रवि पनि अनुसन्धानमा जानुपर्‍यो । अरू पनि जानुपर्छ । संलग्नता पुष्टि भए म पनि जानुपर्ने हुन्छ नि ! कानून सबैलाई समान हुनुपर्छ ।

प्रतिवेदन कार्यान्वयन गर्न हामीले सरकारलाई निरन्तर घचघच्चाइरहेका छौं । मिडियाले पनि घच्घच्याउनुपर्छ । माननीय गृहमन्त्री रमेश लेखकले बागमतीमा उहाँकै पार्टीका सांसद् माननीय धनराज गुरुङको नाम निकालेर उजुरी दर्ता गराउनुभयो । कोशीमा माननीय ऋषिकेश पोखरेलको नाम निकालेर उजरी दर्ता गरिएको छ । यो बेइमानी हो ।

फरारलाई जसरी पनि कानूनी दायरामा ल्याउनुपर्छ । तिनीहरूमाथि अनुसन्धान थालिनुपर्छ । भ्रष्ट र ठगहरूको त कुनै पार्टी हुँदैन । ठगी प्रक्रियामा दोषी देखिएका अनुसन्धान प्रक्रियामा जानुपर्छ । हामी निरन्तर खबरदारी गरिरहेका छौं र गर्छौं पनि । समितिको तर्फबाट र प्रमुख प्रतिपक्षी दल भएको नाताले गर्नुपर्ने कुरा - सहकारी ठगहरूलाई कानुनको दायरामा ल्याउने बचत कर्ताको बचत फिर्ता गर्ने विषयमा हामी निरन्तर लागिरहन्छौं ।

समितिले प्रतिवेदनमा सहकारी ठगी गरेर फरार २९ जनाको नाम सार्वजनिक गरेको छ । यी फरारहरूलाई केपी शर्मा ओली नेतृत्वको वर्तमान सरकारले पक्राउ गर्लाजस्तो लाग्दैन । हेरौँ के गर्छ । किनभने फरार भएका सबैजना वर्तमान सरकारका विभिन्न पात्रसँग जोडिएकाहरू हुन् । सरकारले प्रतिवेदनको अक्षरशः पालना र कार्यान्वयन गर्नुपर्छ । त्यसो हुँदा हत्कडी लाग्ने ९० प्रतिशत मानिस त सरकारकै हुन्छन् । आफ्ना नेता-कार्यकर्तालाई हत्कडी लगाउँदा आफूलाई पनि लाग्ने सम्भावना हुन्छ ।

अबौं रुपैयाँ कोही एक्लैले खाएको होइन होला । त्यसैले; ओली नेतृत्वको वर्तमान सरकारले २९ जना त के, कसैलाई पनि नल्याउनेजस्तो देखिन्छ । सरकारमाथि शङ्का छ । मलाई लाग्छ - उहाँहरूले अहिलेसम्म रवि लामिछानेको बुँदा बाहेक प्रतिवेदनका अरू अंश पढ्नुभएको छैन होला । एकोहोरो रविको बुँदा हेर्नुभएको छ र कुरा गरिरहनुभएको छ । अरू बुँदा छपक्क छोप्नुभएको छ ।

त्यो प्रतिवेदन कहाँ लगेर डम्पिङ साइडमा फाल्ने हो, मलाई पीर परिरहेको छ । तर म त्यो हुन दिन्नँ । हामीले ११ सय लामो प्रतिवेदन राज्यको खर्चले खेलाँची गर्न बनाएको हैन नि ! सरकारले गम्भीरतासाथ प्रतिवदेन कार्यान्वयन गर्नुपर्छ । सरकारले साँच्चिकै जनतालाई भरोसा दिन चाहन्छ भने प्रतिवेदन कार्यान्वयन गरेर देखाउनुपर्छ । आम जनताको दबाब र खबरदारी आवश्यक छ । ठगलाई अनुसन्धान दायरामा ल्याउन संयुक्त ढङ्गले लाग्नुपर्छ । सरकारले त प्रतिवेदन थन्क्याएर ढुक्क हुन मान्न खोजेको हो कि जस्तो देखिन्छ ।

प्रतिवेदन कार्यान्वयनतर्फ सरकारले हालसम्म केही पनि गरेको छैन । समितिले तीन पटकसम्म गृहमनत्रीलाई लिखित नै पठाएका छौं । प्रधानमन्त्री ओलीलाई समितिमा पनि बोलायौं । सहकारीको बचत रकम अपचलनकर्ताहरूलाई पक्राउ गर्न मलेसिया, जर्मनी र बेलायतसम्म जानै सकेन । फरार भएका मानिस यहीँ भारतमा छन्, समितिले उनीहरूको घर, नम्बर, लोकेशन सबै दिएको छ । गृहमन्त्री लेखकले नैए अहिलेसम्म सिन्को भाँच्नु भएको छैन । गफ गरेर हुँदैन, परिणाममा केही देखिएको छैन ।

सहकारी ठगीमा संलग्नहरूलाई पक्राउ गरी कारबाही दायरामा ल्याउन हाम्रा पार्टी अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड' नेतृत्वको सरकारका पालामा निकै पहलकदमी भएको थियो । कूटनीटिक माध्यम र इन्टरपोलमार्फत उनीहरूलाई पक्राउ गर्ने तयारी हुँदैथियो । जीबी राईको राहदानी रद्द गर्ने प्रक्रिया सुरु भएको थियो । भरत महर्जन ल्याउने सन्दर्भमा पनि त्यही हो । तर, जुन दिन सरकारबाट प्रचण्ड बाहिरिनुभयो - त्यहाँदेखि केही भएको छैन । जहाँ पुगेर रोकिएको थियो, त्यहीँ छ ।

सरकारका तर्फबाट केही काम पनि भएको छैन । सरकारलाई के थाहा छ भने कारबाही अघि बढाउँदा सरकारका पात्रहरूले आफ्ना मानिसलाई हत्कडी लगाउनुपर्छ । अन्तिममा हत्कडी लगाउनेले पोलिदियो भने आफैं जेल जानुपर्छ । जेल जाने काम सरकारले किन गर्छ र ? यो बिचौलिया भ्रष्टहरूको मद्दत र सक्रियतामा बनेको सरकार हो । त्यसैले भ्रष्टकै हितअनुकूल काम गर्छ । जनताको हितअनुकूल सरकारले काम गर्दैन भन्ने पुष्ट्याइँ यो साढे दुई महिनाले नै देखाएको छ । बाहिर खरानी धसेर केही हुँदैन ।

समितिले तयार पारेको प्रतिवेदन सरकारले अक्षरशः पालना गर्‍यो भने ४० वटा सरकारी संस्थाको समस्या हल हुन्छ । बचत कर्ताको रकम फिर्ता हुनेछ । त्यो सम्भावना छ । चल-अचल सम्पत्ति जफत गर्दा बचतकर्ताको रकम फिर्ता गर्न सकिन्छ । ८२ - ८३ अर्ब रुपैयाँ फिर्ता ल्याउन सकिन्छ । बाँकी ६ अर्ब रुपैयाँजति सहकारीलाई नै आन्तरिक ऋण प्रवाहमार्फत असुलउपर गराउन सकिन्छ । त्यो निकास पनि हामीले प्रतिवेदनमा दिएका छौं । खबरहबबाट

## अन्तर्राष्ट्रिय ज्येष्ठ नागरिक दिवसको अवसरमा १०० ज्येष्ठ नागरिक सम्मानित

भक्तपुर । अन्तर्राष्ट्रिय ज्येष्ठ नागरिक दिवसको अवसर पारेर भक्तपुर नगरपालिकाले १० वटै वडाका १०-१० जना ज्येष्ठ नागरिकहरुलाई सम्मान गरेको छ । कार्यक्रममा प्रमुख अतिथि नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छेँ (रोहित)ले ज्येष्ठ नागरिकहरुलाई फूलमाला र दोसल्ला ओढाइ सम्मान गरेको थियो ।

अध्यक्ष बिजुक्छेँले ज्येष्ठ नागरिकहरुको सुस्वास्थ र दिर्घायुको कामना गर्दै ज्येष्ठ नागरिकलाई पनि संगठित बनाई सामाजिक गतिविधिमा क्रियाशील बनाउन सके समाजको लागि फलदायी हुने बताए । परिवार र समाजबाट वृद्धवृद्धाहरु अपहेलित र टाँ ढने क्रम बढिरहेकोमा चिन्ता प्रकट गर्दै उनले ज्येष्ठ नागरिकले आफ्नो जीवनकालमा सँगालेका ज्ञान, सीप र अनुभव नयाँ पुस्ताका लागि मार्गदर्शनको रुपमा लिनुपर्ने बताए ।

साथै उनले स्वास्थ खानपान, जीवनशैली, समयमै स्वास्थ्य उपचार, सरसफाइ आदिले ज्येष्ठ नागरिकहरुको आयुलाई लम्ब्याउन सकिने धारणा राखे । नगरपालिकाले ज्येष्ठ नागरिकको लागि आदर निकेतन सेवा छिटै सञ्चालनमा ल्याउने विश्वास व्यक्त गर्दै स्थानीय तहका जनप्रतिनिधिहरुले नगरभित्र बसोबास गर्ने ज्येष्ठ नागरिकहरुको तथ्यांक संकलन गरी आवश्यक सेवा सुविधा प्रदान गरी सहयोगी भूमिका निभाउन जोड दिए । त्यस्तै कार्यक्रमका सभापति गरपालिकाका प्रमुख सुनिल प्रजापतिले ज्येष्ठ नागरिक समाजका आदर्श पात्र हुन् र उहाँहरुको सम्मान गर्नु सबैको कर्तव्य र जिम्मेवारी भएको बताउँदै उमेर बढेसँगै ज्येष्ठ नागरिकहरुको स्वास्थ्यमा समस्या आउने, ढाड दुख्ने, खुट्टा दुख्ने जस्ता शारीरिक समस्याहरु बढ्दै जाने भएकोले नगरबासीहरुको स्वास्थ्यलाई ध्यानमा राखी विभिन्न स्थानमा शारीरिक व्यायामस्थलको व्यवस्था गर्दै आएको जानकारी दिए । नेमकिपाको आह्वानमा भएको मोहियानी हक सुरक्षाको आन्दोलन, भपाई आन्दोलन, बाली काट्ने आन्दोलनमा भाग लिने अग्रजहरुमा सम्मान प्रकट गर्दै उनले किसानहरुले मोहियानी हक र गुठी जग्गा रैतानीको हक अग्रज कार्यकर्ताहरुले गरेको संघर्षको प्रतिफल भएको बताए ।

ख्वप अस्पतालका निमित्त मेडिकल डाइरेक्टर डा. मजेशप्रताप मल्लले बढ्दो उमेरसँगै लाग्ने रोग र त्यसको जोखिमबारे सजग बनाउँदै ज्येष्ठ नागरिकहरुको मानसिक स्वास्थ्य राम्रो बनाउनतर्फ परिवारले ध्यान दिनुपर्ने बताए । सम्मानित ज्येष्ठ नागरिकहरुलाई भक्तपुर नगरपालिकाको तर्फबाट पानी तताउने इलेक्ट्रिक जग, फलफूल र बिस्कुट पनि उपहारस्वरुप प्रदान गरिएको थियो ।

# भक्तपुर प्रहरीको चाडपर्व लक्षित सुरक्षा योजना



भक्तपुर । भक्तपुर प्रहरीले चाडपर्व लक्षित सुरक्षा योजना सार्वजनिक गरेको छ । जिल्ला प्रहरी परिसर भक्तपुरले शुक्रवार नेपालीहरुको मूख्य चाडपर्वहरु बडादशैँ, तिहार र छठ पर्वका बेला हुन सक्ने अपराधिक गतिविधि नियन्त्रण गरी शान्ति सुव्यवस्था कायम गर्न सुरक्षा योजना सार्वजनिक गरेको हो ।

सुरक्षा योजनाको उद्देश्य

चाडपर्व लक्षित सुरक्षा योजनाको मूख्य उद्देश्य २०८१ सालको बडादशै, तिहार, तथा छठ पर्व लगायतका चाडपर्व अवधिभर कुनै पनि प्रकृतिका अपराधिक गतिविधि एवं अप्रिय घटनाहरु हुन नदिई जिल्लाको समग्र शान्ति सुरक्षालाई व्यवस्थित तथा भरपर्दो बनाई आम नागरिकलाई सुरक्षाको प्रत्याभूति गराई सौहार्दपूर्ण वातावरणमा चाडपर्व मनाउने व्यवस्था मिलाउने रहेको परिसरका सूचना अधिकारी प्रहरी नायव उपरिक्षक मोहनमणी अधिकारीले बताउनुभयो ।

जिल्लाको सुरक्षा चुनौती

भक्तपुर क्षेत्रफलको हिसावले सानो जिल्ला भएपनि यहाँको जनघनत्व, विविध साँस्कृतिक परिवेशका कारण विविध खाले सुरक्षा चुनौती रहेको प्रनाउ अधिकारीले बताउनुभयो । उहाँले भक्तपुरमा मादक पदार्थ तथा लागूऔषध सेवनबाट सृजित अन्य अपराध, भ्कै भ्कगडा एवं होहल्ला गरी शान्ति सुरक्षामा असर पुग्ने खालको उच्श्रृंखल क्रियाकलापहरु हुन सक्ने चुनौती रहेको बताउनुभयो ।

यसैगरी चोरी, विभिन्न बैंकहरुको एटिएम फुटाई चोरी, डकैती, लुटपाट, चेन स्न्याचिङ, बगलीमारा, नक्कली सुन तथा डलर लगायत विविध सामाग्री देखाई ठगी तथा ईन्टरनेट, सामाजिक सञ्जाल मार्फत समेत हुने ठगी, चन्दा असुली, जुवातास लगायतका अपराधहरु बढ्न सक्ने, विभिन्न हातहतियारको प्रयोग समेत गरी अपराधिक घटना घटाउन सक्ने खतरा रहेको छ ।

मादक पदार्थ तथा लागू औषध सेवन गरी सवारी चलाउने, तिब्र गति, ओभरलोड लगायतका अन्य ट्राफिक नियम समेत उलंघन गरी सवारी चलाउदा दुर्घटनाका घटनाहरु बढ्न सक्ने, सार्वजनिक यातायातमा बढी भाडा असुली, यात्रुहरुसँग दुर्व्यवहार एवं ठगी गर्न सक्ने चुनौती रहेको छ ।

यसैगरी आतिस बाजी, पटका लगायतका विविध विष्फोटक पदार्थहरुको ओसार पसार तथा विक्रिवितरण हुन सक्ने तथा पटका पड्काई आगलागीका घटना घट्न सक्ने कारण मानवीय तथा आर्थिक क्षती हुन सक्ने, दैनिक आपुर्तिका सामानहरुको कालोबजारी बढ्न सक्नेलगायतका अपराधिक घटना हुन सक्ने आंकलन गरिएको प्रनाउ अधिकारीले बताउनुभयो ।

सुरक्षा योजना अनुसार सम्पादन गरिने मूख्य कार्य

सुरक्षा योजना अनुसार जिल्लाको सुरक्षा व्यवस्थाका लागि ६१७ जना प्रहरी परिचालन गरिने प्रनाउ अधिकारीले बताउनुभयो । उहाँका अनुसार चाडपर्वमा हुन सक्ने अपराध रोकथामको लागि जनचेतनामुलक जिङ्गल बजाउने, विभिन्न मठ मन्दिर, शक्तिपिठ, जात्रा निस्कने स्थानहरुमा हुन सक्ने अवैध घरेलु मदिरा तथा लागू औषध ओसारपसार तथा विक्रि वितरणलाई न्यूनिकरण गर्न प्रभावकारी प्रहरी परिचालन गरिने छ ।

यसैगरी चोरी, डकैती, लुटपाट, चेन स्न्याचिङ, बगलीमारा, नक्कली सुन तथा डलर लगायत विविध सामाग्री देखाई तथा ईन्टरनेट, सामाजिक सञ्जाल मार्फत समेत हुने ठगी, जुवातास लगायतका अपराधहरु नियन्त्रण गर्न सूचना संकलन तथा विश्लेषण गरी पिकेटिङ, नियमित चेकिङ, आकस्मिक चेकिङ, आकस्मिक तथा विस्तृत खानतलासी, क्यूआरटी, पैदल तथा सवारी साधनबाट गस्ती बढाईने छ ।

आम नागरिकहरुसँग समन्वय तथा सहकार्य गर्ने, ट्राफिकसँग सहकार्य गरि बढी सवारी दुर्घटना हुने समय, स्थानहरुको पहिचान गरी मा.प.से., ओभरस्पिड तथा ओभरलोडलाई लक्षित गरि नियमित तथा आकस्मिक चेकिङ प्रभावकारी बनाईने प्रनाउ अधिकारीले बताउनुभयो ।

यस्तै बसपार्क, सवारी चाप बढी हुने स्थानहरु टिकट बुकिङ काउन्टरहरुमा यातायात व्यवसायी, ट्राफिक प्रहरीसहितको प्रहरी संयुक्त हेल्प डेस्क राख्ने र यात्रुहरु ठगिन सक्ने कुरालाई ध्यानमा राखी निगरानी बढाईनेछ ।

पटका भण्डारण, ओसार पसार तथा विक्रिवितरण गर्नेलाई कानूनी दायरामा ल्याई कारवाही गर्ने, कालोबजारी नियन्त्रणको लागि जिल्ला प्रशासन कार्यालय तथा अन्य निकायहरुसँग समन्वय गरी सूचना संकलन समेत गरी निरन्तर बजार अनुगमन गर्ने, सिसि क्यामरा निगरानीलाई प्रभावकारी बनाई अपराध नियन्त्रण तथा रोकथाममा प्रयोग गर्ने, 'समुदाय प्रहरी साझेदारी' कार्यक्रमहरुलाई प्रभावकारी रुपमा संचालन गरी आमनागरिकमा सचेतनाको अभिबृद्धि गर्ने योजना रहेको प्रनाउ अधिकारीले जानकारी दिनुभयो ।

उहाँले जनचेतना अभिबृद्धिका लागि १० हजार पर्चा पम्प्लेट छापेर वितरण गरिनेछ भने मध्यपुर थिमि १, लोहकिल्थली र जगाती चोकमा गरी २ वटा यात्रु सहायता कक्ष स्थापना गरिनेछ ।

सवारी साधनमा पाकेटमारी नियन्त्रणका लागि सेफ्टी पिन प्रहरी परिचालन, शक्तिपिठ तथा मन्दिरहरुमा दर्शनार्थीहरुको सुरक्षा डिउटी, महत्वपूर्ण प्रतिष्ठान तथा सरकारी कार्यालयको सुरक्षा डिउटी व्यवस्था मिलाउने र उपत्यका प्रवेश नाकामा जाँच गरिने छ ।

जिल्लाका सार्वजनिक स्थान, सार्वजनिक सवारी साधन, निजि आवास, व्यापारिक स्थल, बैंक तथा वित्तीय संस्था, सुनचाँदी पसल, आर्थिक कारोबार हुने स्थानहरुमा मानिसहरुको चहल पहल बढ्दै गईरहेको सन्दर्भमा जनताले भयरहित वातावरणमा अपराध मुक्त चाडपर्व सुरक्षित तथा हर्षोल्लास तवरबाट मनाउनका साथै सम्भावित चोरी, डकैती, लुटपाट, पाकेटमार अपहरण जस्ता विविध शान्ति सुरक्षासँग जोडिएका अपराधलाई नियन्त्रण गरि आम नागरिकहरुमा शान्ति सुरक्षाको प्रत्याभुति दिलाउन सुरक्षा योजना निर्माण गरी कार्यान्वयन गरिएको प्रनाउ अधिकारीले बताउनुभयो ।

उहाँले जनस्तरसम्म सचेतना कार्यक्रम, २४ सैं घण्टा प्रहरी गस्ती, एम्बुसिङ, चेक प्वाईन्ट, पिकेट, सरप्राईज चेकिङ्गको लागि यस परिसर तथा मातहत प्रहरी ईकाईहरुमा उपलब्ध प्रहरी जनशक्ति तथा साधनस्रोतलाई उच्चतम प्रयोग एवं परिचालन गरी अपराधिक घटना नियन्त्रण गरी आमनागरिकलाई भयरहित वातावरणमा चाडपर्व मनाउने वातारवण निर्माण गर्ने योजना रहेको बताउनुभयो ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### कहिले सम्म यो भवितव्यको चक्रमा परिरहने ?

गत साता देशका धेरै जसो जिल्लामा परेको अविरल वर्षाको कारण जनधनको क्षति व्यहोर्नु परेको छ। त्यसमा अझ देशकै राजधानी रहेको उपत्यकाको स्थिति अझ भयावह थियो भने उपत्यका बाहिरको स्थान जहाँ कुनै पूर्वाधारहरु नभएको र सुविधा पनि कम भएको स्थानको स्थिति कस्तो भएको थियो होला ? आकंलन गर्न सकिन्छ। उपत्यकाका खोलाबरपरका बगर मिचेर बनाएका संरचनाहरु कै कारण खोला सांघुरो बन्न गएको छ। जुन बगरको काम भनेको बर्षको केही समय खोलामा बहने पानीलाई विना क्षति बग्न दिन कै लागि बगर बनेका हुन्। जुन बगरहरु अहिले राजधानीमा रहेका प्रमुख नदिहरुमा मिचिसकेको र अतिक्रमित भइसकेका छन्। जसको कारण वर्षामा पर्ने अविरल वर्षा लगायतले उपत्यकामा डुबान हुने समस्या विगतदेखि देखिदै आएको स्थिति हो। यही डुवानको स्थिति आउने दिनमा पनि हुने निश्चित छ। तर सरकार, दलका कार्यकर्ता अनि सर्वसाधारणहरु भने राज्यलाई दोष दिएर पन्छिने गरेको छ। राज्य संयन्त्र पनि शक्ति र पहुँचकै आधारमा यस्ता बगर मिच्ने र मिचाउने कार्यमा संलग्न रहेको देखिन्छ। यो क्रम आज पनि चलिरहेको अवस्था छ।

यही नै “परेर पनि नचेत्ने” नेपाली जनता र शासकको स्वभाव बनिसकेको छ। यसैले बर्सेनि बाढी, पहिरो, डुबान, कटानको कहर सहनु पर्दा पनि हामी चेतेका छैनौ। नत्र, एउटै ठाउँमा पटक पटक पहिरो वा बाढीको चपेटामा पक्कै पर्नुपर्ने थिएन।

जनसाधारणसँग त अधिकांश अवस्थामा विकल्प पनि हुँदैन। आफ्नो जमिन बाढी, पहिरो, कटान वा डुबानको जोखिम भएको ठाउँमा जहाँ भए पनि खेती त्यहीँ गर्नुपर्‍यो। काम विशेषले कतै जानुपर्दा राजमार्गमा सार्वजनिक सवारी साधनबाटै यात्रा नगरी सुख हुँदैन। राज्यमा भने शासक थोरैमात्रै पनि दूरदर्शी र संवेदनशील भइदिएको भए जनताले पनि विकल्प पाउँथे। मूलतः शासकहरूले प्रकृतिको अनुचित दोहन गर्ने लोभ नगरेको भए अहिले भोग्नु परेको कतिपय विपत्ति आइलाग्ने नै थिएनन् भने अधिकांशको भयावहता निकै कम हुनेथियो।

पीडितहरूलाई आकस्मिक सहायता पुर्‍याएपछि सरकारले त बिर्सने गरेकै छ बाढी, पहिरोको कहर भोग्नेहरूले पनि त्यसको कारण र निराकरणको उपाय खोज्नुमा कुनै चासो दिएको पाइदैन। एकपटकको कहर भोगीसके पछि त्यसलाई बिर्सने गर्दछ भने शासकवर्ग पनि राहत दिएपछि दायित्वबाट मुक्त भएको ठान्दछ कुनै झन्झट गर्दैनन्। अर्कोपटक उस्तै विपत्ति आइलागेपछि कि त भाग्यलाई दोष दिन्छन् नभए भवितव्य भनेर चित्त बुझाउँछन्।

यसैले यस्तो कहर नियमितरूपमा भोग्नु हाम्रो नियति नै हुनपुगेको छ। नदी वा खोलाको किनारमा दैत्याकारको स्काभेटर चलाएर खोतलेका कारण खोलाले बाटो बदल्दा विध्वंश भएको हुन्छ। तर, अहिलेसम्म त्यो कुकर्म गर्नेहरूलाई विध्वंशका लागि जिम्मेवार ठहर्‍याउने गरिएको छैन। कतिपय खुरिखन्डे पखेरामा डोजर लगाएर बाटामा नाममा जथाभावी खोस्रिँदा पाखै पहिरो भएर बगेर गएको छ। त्यहाँको जमिनले धान्नै नसक्ने बाटो बनाउन लगाउने जनप्रतिनिधि वा डिजाइन गर्ने प्राविधिकलाई भने कसैले पनि औँला उठाउने गरेको छैनन्।

सम्भवतः यही कारणले पनि राजनीतिक नेताहरू बेलाबखत कहिले काली गण्डकी थुनेर अर्कै खोलामा खसाल्ने वा कहिले चुरे खोस्रेर ढुंगा बेच्नेजस्ता बहुलठ्ठीपूर्ण योजना अगाडि सार्न हौसिन्छन्। 'बूढो बाघको सुनको बाला'मा लोभिएका शासकहरूले द्रव्यपिचासहरूको भाषा बोलेको जनताले भने थाहै पाउँदैनन्। अब पनि यो नियतिवाद र बदनियतको दुश्चक्र नटुटाउने हो भने प्राकृतिक विपत्तिको भयावहता झन् झन् बढ्दै जानेछ भने यो कथित 'भवितव्य'को चक्र पनि नियमितजस्तै हुनेछ। यसैले अहिलेको विपत्तिको गम्भीर विश्लेषण गरेर त्यसको कारण निवारण सरकार र समाजले गर्नुपर्छ।

ऋबको योजनाहरु बनाउँदा भौगर्भिक अध्ययन नगरी डाँडा खोस्रन र नदी वा खोलाका किनार खोतल्न तत्काल प्रतिबन्ध लगाउनुपर्छ। अहिलेको विध्वंशका अनुपातमा खोला खोतलेर भएको आय वा डाँडा खोस्रेर भएको हिउँदे सुविधा नगन्य हुन्छ। विध्वंश नहुने भएमात्र डाँडामा बाटो बनाउने र खोलाका ढुंगा बालुवा झिक्ने गरौँ र उपत्यकामा रहेका नदीहरुको व्यवस्थापनमा पनि सरकार, स्थानीय निकाय र सरोकारवालाहरुले बेलैमा सोच्ने गरौं। किनकी आजको यो स्थिति भोलीका दिनमा पनि दोहोरिने छ। विगतदेखि दोहोरिदै आएको पनि हो। यसको समाधानमा अब भने सोच्ने बेला आइसकेको छ। अब पनि नचेटे देशको समृद्धिको नारा दिनु मात्र नारामा सीमित हुने छ। राज्य, राजनीति दल, नेता अनि आम नागरिकमा चेत खुलोस्।

# विपद्मा नेतृत्वविहीन देश !

● सुदर्शन खतिवडा

काठमाडौं। गत वर्ष कार्तिकमा देश भूकम्पको पीडा खेपिरहेको बेला राष्ट्रिय विपद जोखिम न्यूनीकरण तथा व्यवस्थापन प्राधिकरणका कार्यकारी प्रमुख अनिल पोखरेल जापान उडेका थिए।

यसपटक पनि असोज ७ देखि नै मौसम विभागले ‘आरिघोप्टे वर्षा’ हुने र ठूलो विपद् निम्तन सक्ने भन्दै सचेत गराइरहेको बेला मुलुकको विपद् व्यवस्थापनको जिम्मेवारी बोकेका प्राधिकरणका कार्यकारी प्रमुख पोखरेल शुक्रबार राति बेलायत उडेका छन्।

सरकारका अर्का उपप्रधान तथा अर्थमन्त्री विष्णुप्रसाद पौडेल चीन भ्रमणमा थिए। ७ असोजमा चीन पुगेका उनी नेपालमा विपद्ले चौपट मच्चाइरहँदा चीनमै रहे। उनी वर्षा रोकिएपछि आइतबार दिउँसो स्वदेश फर्किएर भीषण बाढी र पहिरोले जनधनमा ठूलो क्षति पुर्‍याएकोमा दुःख व्यक्त गरेको उनको सचिवालयले जनाएको छ।

अरु त अरु, संयुक्त राष्ट्रसंघको महासभामा भाग लिन अमेरिका गएका हाम्रा प्रधानमन्त्री केपी शर्मा ओली आज साँझ बल्ल नेपाल फर्कँदैछन्। मुलुकमा यति ठूलो जनधनको क्षति हुँदा उनले स्वदेश फर्कन हतारो देखाएनन्।

अचम्म त कहाँनेर छ भने नेकपा एमालेको विशाल पार्टी संरचनाभित्र कसैले पनि प्रश्न गर्न आवश्यक ठानेनन् कि ‘कमरेड ! यो एक दुई देशका प्रतिनिधिसँग हात मिलाएर फोटो खिचाउने र एक दुइटा विश्वविद्यालयमा प्रवचन दिएर बस्ने समय होइन कि ?’

संसारका सबैजसो देशले यस्ता विपद्को सामना गर्नुपर्ने हुन्छ। तर जुनसुकै देशका पनि जिम्मेवार नेताहरू संकटको बेला जनताबाट टाढा बस्न सक्दैनन्, नजिक आउँछन्। उनीहरुले जिम्मेवारी लिन्छन् र सक्दो क्षमता प्रयोग र परिचालन गर्छन्। नसक्दा योग्यका लागि जिम्मेवारी छोडेर नैतिकता प्रदर्शन गर्छन्। तर, हाम्रो राजनीतिक नेतृत्वले विपद्को बेला जिम्मा लिनुपर्छ भन्ने यस पटक पनि ठानेन।

फुर्सदिला प्रधानमन्त्रीको प्राथमिकतामा ‘विपद्मा परेको देश’ परेन। केही नभए पनि संकटमा परेका नागरिकले आफ्नो कार्यकारी प्रमुख नजिकै छ, हाम्रो लागि केही गरिरहेको छ भन्ने अनुभूति गर्न पाएनन्। भनौं, संकटको बेला, विपद्को बेला देश नेतृत्वविहीन भयो।

यस्तोमा, आम नागरिक मात्रै होइन, प्रमुख सत्ता साझेदार नेपाली कांग्रेसले नै प्राकृतिक प्रकोपसँग जुध्न सरकारले आवश्यक पूर्वतयारी नगरेको भनेर असन्तुष्टि जनाएको छ। स्मरणीय छ, कांग्रेसकै नेता प्रकाशमान सिंह अहिले देशको कार्यवाहक प्रधानमन्त्री छन्।

आखिर नेतृत्वको सम्पूर्ण परीक्षण यस्तै संकटकै बेलामा हुने हो। सजिलो अवस्थामा त सबै ‘महान’ देखिन सक्छन्।

चुकेको सरकार

पूर्व मनसुन तयारी बैठकमा सरकारले राम्रो तयारी भएको जानकारी दिंदै आएको थियो। सञ्चार माध्यमले नेपालतिर पानी पार्ने प्रणाली सोहिरिएकोले विपत्तिको जोखिम बढ्यो भनेर स्पष्ट सञ्चार गरेका थिए।

तर काठमाडौं उपत्यकामा उद्धारमा खटिएका जवानहरूको हात लगभग रित्तो थियो। उनीहरू उद्धार सामग्रीको अभावमा काम गर्न सकिरहेका थिएनन्। २० वर्ष अगाडि किनेको सीमित डोरी बोकेर उनीहरू उद्धारमा खटिएका थिए।

विपद् व्यवस्थापनमा सरकारको तयारी र प्रतिकार्यको अभावले जनधनको क्षति बढाएको छ र सरकारको विपद् व्यवस्थापन क्षमतामा गम्भीर प्रश्न उठेको छ।

संसारमा संकटको बेला नेताहरूको व्यवहार र प्रतिक्रिया बारे अध्ययनहरू भएका छन्। असल नेतृत्वले विपत्तिमा स्पष्ट सन्देश दिने, निर्णय लिन ढिला नगर्ने र जनतासँगको सम्बन्ध बलियो बनाउने प्रयास गर्छन्। उनीहरूले यस्तो व्यवहार गर्छन् कि संकटमा रहेका नागरिकले हाम्रो नेतृत्व/अभिभावक मसँगै छ भन्ने बलियो सन्देश प्राप्त गरून्। नेतृत्व नबोले पनि सन्देश के गइरहेको हुन्छ भने- जनताभन्दा पहिलो प्राथमिकता नेतृत्वको अरू छैन।

तर हाम्रोमा व्यवहार त्यस्तो देखिएन। विपद् बढिरहँदा प्राधिकरण प्रमुख विदेश भ्रमणमा निस्किए। स्वाभाविक प्रश्न उठ्छ- यस्तो प्राधिकरण र प्रमुख नेपाली जनतालाई किन चाहियो ? यतिसम्म कि सरकारले सर्वदलीय बैठक बोलाउने छाँटकाँट नगरेपछि प्रमुख प्रतिपक्षले बैठक बोलाएर सन्देश दिनुपर्ने अवस्था देखियो। तर पनि प्रधानमन्त्रीले भ्रमण छोट्याउने आवश्यकता महसुस गरेनन्।

यस्तो अवस्थामा आफैं विदेशमा रहेका प्रधानमन्त्रीले प्राधिकरण प्रमुखलाई कुन नैतिकताले स्पष्टीकरण सोधून् ?

देशको कार्यकारी प्रमुख विदेश रहेको समयमा आपत्कालीन अवस्थाका लागि कार्यवाहक प्रधानमन्त्रीले विशेष मन्त्रिपरिषदको बैठक राखेर आवश्यक काम गर्नुपर्ने थियो। २०६५ भदौमा तत्कालीन प्रधानमन्त्री प्रचण्ड बेइजिङ ओलम्पिक्समा भाग लिन चीन गएका थिए। यता, कोशी बाँध फुटेर विपत्ति निम्तियो। त्यतिबेला कार्यवाहक प्रमको भूमिकामै डा.बाबुराम भट्टराईले तत्काल विशेष मन्त्रिपरिषद् बैठक राखेर उद्धार र राहतका काम अघि बढाएका थिए।

सरकारको केन्द्रीय सचिवालय सिंहदरबार वरिपरि नै बाढीले नराम्रो क्षति पुर्‍याएको छ। उपत्यकाभित्रै ठूलो मानवीय क्षति भएको छ। त्यही भएर अहिले सरकार निरीह कुरा गरेर आफ्नो बचाउ गरिरहेको छ।

मौसमसम्बन्धी पूर्वसूचनासँगै जोखिम क्षेत्रहरू पहिचान गरी त्यहाँ बस्ने नागरिकलाई सुरक्षित स्थानमा सार्ने काम हुन सकेको थिएन। उद्धारमा ढिलासुस्ती त्यस्तै छ। राहतमा पनि राज्य चुकिरहेको छ। प्रभावित क्षेत्रसँगको सञ्चार सम्पर्क विच्छेद छ। यी सबैले हाम्रो विपद् व्यवस्थापन प्रणाली कति कमजोर छ भन्ने प्रष्ट बनाएको छ।

प्राकृतिक प्रकोप व्यवस्थापनको पूर्वतयारी, प्रतिकार्य र पुनर्लाभका तीनै चरणमा अब्बल नतिजा देखाउने मौकामा सरकार नराम्ररी चुकेको छ। अझै पनि प्रतिकार्य सुस्त छ। गुहार माग्दा केही नलागेपछि पहिरोमुनि च्यापिएका शवहरू नै निकाल्न बाँकी छन्। झ्याप्रे खोलामा पहिरोले पुरिएका बस र यात्री निकाल्ने उपकरण तेल सकिएर रोकिएको खबर सुन्नुपर्दा सरकारप्रति नागरिकको प्रतिक्रिया कस्तो होला ?

अझैपनि राजधानीबाट टाढा सीमान्त भूगोलबाट पूर्ण खबरहरू आउनै बाँकी छन्। थुप्रै नागरिकले ज्यान गुमाएका छन्, त्यत्तिकै बेपत्ता र घाइते हुँदा हजारौं विस्थापित भएका छन्। हाम्रो प्राकृतिक सौन्दर्य ध्वस्त भएको छ।

विश्वको जुनसुकै कुनामा भए पनि प्रधानमन्त्रीले यी सबै कमजोरीको जिम्मा लिनुपर्छ। कमसल पूर्वतयारी, कमजोर प्रतिकार्य भएपछि सरकारले राम्रो प्रतिक्रिया पाउँदैन। अहिले देखिएको सरकार विरोधी आक्रोश यसैको प्रतिफल हो।

सरकारको कमजोर ‘भिजिबिलिटी’

शुक्रबारदेखिको अविरल वर्षाका कारण जलमग्न ललितपुर महानगरपालिका- २५ सुगम बस्ती टोल नजिकै नख्खु खोला किनारमा टहरोबाट एउटा परिवार नै बग्यो। टहरोमाथि उनीहरू घन्टौंसम्म उद्धारको याचना गर्दै पर्खिरहे तर अन्ततः उनीहरूलाई खोलाले बगायो।

‘नख्खु खोलामा केही मानिसहरू टहराको छतमा बसेको अवस्थामा कोसिस गर्दागर्दै पनि बचाउन सकेनौं। हेलिकप्टरमार्फत् पनि उद्धार गर्न सकिएन। भिजिबिलिटीका कारण जोगाउन सकेनौं’, गृहमन्त्री लेखकले भनेका थिए।

तर, यो तर्कले विपद् व्यवस्थापनमा भएको गम्भीर कमजोरीलाई छोप्न सकेन। उल्टो, सरकारको विपद् प्रतिकार्य तयारीको ‘भिजिबिलिटी’ पो कमजोर देखियो। किनकि पूर्वतयारीका लागि समय पर्याप्त थियो। पूर्वानुमानमा नेपाल पनि परिपक्व भइसकेको र ९० प्रतिशत जस्तो बढी मौसम पूर्वानुमानहरू मिल्न थालेको विज्ञहरूले नै बताइरहेका थिए।

नेपाल आफैंसँग प्रविधि रहेको र खासगरी दक्षिण एशियाली संरचनासँग पनि जोडिएकोले यो सम्भव भएको हो। त्यसैले ठिक समयमा ‘अलर्ट’ जारी भएका थिए। विशेष बुलेटिनहरू प्रकाशन भइरहेका थिए। आम सञ्चार माध्यमले त्यसरी नै ‘कभरेज’ गरिरहेका थिए।

चणिकलाल तामाङलाई उद्धारमा बगिरहेको बाढीमा हामफाल्दा ‘भिजिबिलिटी पुअर’ भएन तर गृहमन्त्री भिजिबिलिटी पुअर भएर हेलिकप्टरबाट उद्धार गर्न नसकेको बताइरहेका थिए।

पूर्वतयारी, प्रतिकार्य र पुनर्लाभ तीनै चरणमा भिजिबिलिटी गुमाएको सरकारका गृह मन्त्रीसँग बाढीले बगाएका नागरिकलाई अरु नागरिकले उद्धार गरेर बचाउन सक्छन् भन्ने ‘दूरदृष्टि’ र विश्वास बाँकी थिएन। उनले तत्कालै ‘मृत्यु’ नै भइसकेको आशयसहित दुःख व्यक्त गरे। मौसमको होइन सरकारको भिजिबिलिटी कति कमजोर छ भनेर थाहा पाउन यो दृष्टान्त पर्याप्त छ।

विभिन्न अध्ययन प्रतिवेदनमा मात्र होइन, नेपाल सरकारकै गृह मन्त्रालयको प्रतिवेदनमा पनि नेपाल जलवायुजन्य जोखिमका दृष्टिले २०० देशमध्ये चौथो जोखिमयुक्त देश भनेर उल्लेख छ। पछिल्लो समय जलवायु परिवर्तन लगायतका विभिन्न कारणले यस्ता बाढी पहिरोको आयतन र प्रभाव बढ्दै गएको देखिन्छ।

यी विपद्मा प्रकृतिको सँगै मान्छेको दोष कति हो ? निश्चयनै यो प्राकृतिक विपत्तिभन्दा बढी विवेकशील प्राणीको बुद्धिमा बिर्को लाग्दा प्रकृतिविरुद्ध जाने रफ्तार नरोकिनुको प्रतिफल हो। यसको कारक मान्छे हो। यसलाई रोकथाम गर्न हामी कहाँ चुक्यौं ? सिंगो राज्ययन्त्र/राज्यशक्ति परिचालनमा हामी कहाँ चुक्यौं ? यसको समीक्षा नगरी अब अगाडि बढ्न सकिन्न।

चाडबाडको मुख, राजधानीमा ‘नाकाबन्दी’

बाढी पहिरोले मुलुकका धेरै स्थानमा तवाह मच्चाएको छ। सयौं वर्ष लामो सपना र दशकौं लामो प्रयासबाट बनेका पुलहरू बगेका छन्। सडक भत्किएका/पुरिएका छन्। अरु भौतिक संरचनामा क्षति छ। यसरी हेर्दा एउटा पुल मात्रै होइन, नागरिकको सपना बगेको छ।

हजारौं विस्थापित छन्। देश चाडपर्वको मुखमा छ। दशैंमा २० लाख मानिस घर जानुपर्ने अवस्थामा बसेका छन्। यस्तो बेलामा स्वाभाविक रूपमा सरकारको भूमिकाको खोजी हुन्छ।

तर, काठमाडौं एकप्रकारको नाकाबन्दीमा छ। यो नाकाबन्दी कुनै शक्ति केन्द्रले राजनीतिक निर्णय गरेर खुल्दैन। न्युयोर्कबाट फर्कनासाथ आज साँझदेखि नै प्रधानमन्त्रीका अगाडि एउटा बलियो चुनौतीको पहाड उभिने छ- चाडबाडको मुखमा लाइफलाइन काटिएको राजधानीबाट कसरी देश चलाउने ?

सिमलताल हुँदै झ्याप्ले खोलासम्म आइपुग्दा सरकारले के सिक्यो ? विपद् प्रतिकार्यमा अब्बल ठहरिन कति नागरिकले आफ्नो ज्यान गुमाउनुपर्ने हो ? नेपाली समाजले अझ कति ठूलो वियोग व्यहोर्नुपर्ने हो ? यो स्तरको नागरिक वियोग अयोग्य शासकहरूको कमजोर विपद् प्रतिकार्यको मूल्यमा व्यहोर्नुपरेको हो।

प्रतिपक्षको रमिता

मानिसहरू अझै पनि उद्धार कुरिरहेका छन्। तर, रचनात्मक भूमिका बिर्सिएर प्रतिपक्षी दलहरू विपद्लाई राजनीतिक अवसरका रूपमा उपयोग गर्ने रणनीतिमा देखिन्छन्। विपत्तिलाई अवसर बनाएर च्याँखे थाप्नुअघि दलहरूले राजनीतिक दलसम्बन्धी ऐन २०७३ को दफा २० पढून।

त्यहाँ दलको काम, कर्तव्य र अधिकार बारे यसो भनिएको छ- विपद् जोखिम न्यूनीकरण शिक्षा अभियान सञ्चालन गरी पूर्वतयारी कार्यमा सहयोग पुर्‍याउने, राष्ट्रिय विपत्तिको समयमा खोज, उद्धार, सहयोग, पुनर्स्थापना लगायत अन्य आवश्यक सहयोग गर्ने।

तर यी जिम्मेवारी बिर्सिएर, विपद्को बेला पार्टी संरचना परिचालन गर्न छाडेर पूर्वप्रधानमन्त्री प्रचण्ड चणिकलाल तामाङलाई कार्यकर्ता करार गर्दै खादामाला लगाइरहेका छन्। उता एमालेका केही कार्यकर्ता शनिबार नै केही उद्धारकलाई ‘पार्टी सदस्यता’ टँसाउँदै सामाजिक सञ्जाल रंगाइरहेका थिए।

भर्खरै, सत्ताबाट प्रतिपक्षमा धकेलिएको राष्ट्रिय स्वतन्त्र पार्टीको विपद्मा आधिकारिक धारणा आलोच्य रह्यो। पार्टीका कार्यबाहक प्रवक्ता मनिष झाले आइतबार ‘दुई दिनको पानीले दुई तिहाइको औकात देखाइदिएको’ टिप्पणी गरिरहेका थिए।

कस्तो हुन्थ्यो होला- लाखौंलाख दलका कार्यकर्ता विपद्मा परेका नागरिकका उद्धारक बनेर उद्धारमा हानथाप गरिरहेका भेटिनु र नागरिक तहबाट नै ती उद्धारकलाई खादामाला लगाउन झ्याइनझ्याइ हुन्थ्यो भने। बिडम्बना, सस्तो राजनीति हुने हाम्रो देशमा यी सबै कुरा कल्पनामा मात्रै सम्भव छ।

त्यसैले मतदाताले अब भोट माग्न आउनेलाई सोध्नुपर्छ- तपाईंहरूले राजनीति गर्ने यही देशमा होला जहाँ प्राकृतिक विपद्को जोखिम अत्यधिक छ। विपद् प्रतिकार्य सम्बन्धी तपाईंको पार्टीको योजना के छ ?

केही प्रश्न रमिते भिडलाई पनि

विपद्जन्य घटना आसपास हुने रमितेको भिडप्रति पनि सचेत नागरिकले प्रश्न गर्नुपर्छ। सरकारले कोशी ब्यारेज वरपर नजानु भन्छ। भिड त्यहीं पुग्छ। उनीहरूलाई हटाउन प्रहरी नै परिचालन गर्नुपर्छ। मौसम पूर्वानुमान र सम्भावित जोखिम हेरेर रात्रिकालीन बस सेवा बन्द गर्ने निर्णयको पूर्ण पालना भएन।

विपदसँग लड्नु सरकारको मात्रै दायित्व होइन। नागरिक आफैं राज्यको एउटा महत्वपूर्ण इकाई हो। सरकार निरीह देखिएको बेला व्यक्ति र परिवार थोरै मात्रै जिम्मेवार हुने हो भने आफ्नो र केही मात्रामा अरुको पनि ज्यान बचाउन सकिने रहेछ भन्ने यस पटककै उदाहरण काफी छ। त्यसकारण विपद्बाट बच्ने सचेतना र सीप नागरिकले पनि लिइराख्नुपर्छ।

नख्खुमा परिवार बाढीले बगाइरहँदा फेसबुक लाइभ गरिरहेका नागरिकलाई डोरी खोज्ने हतारो देखिंदैन। आज केही मानिस बाढी-पहिरोमा पर्छन्। यस्तो विपद्को जोखिम अत्यधिक रहेको देशमा को कतिबेला प्राकृतिक-मानवीय विपद्को एम्बुसमा पर्छन्, थाहै हुँदैन। के थाहा हामी पर्दा अरू कोहीलाई यसरी नै डोरी खोज्ने हतारो हुँदैन कि ? किनकि हाम्रा वरिपरि सधैं चणिकलालहरू नभेटिन सक्छन्।

अनलाइनखबर

# चीनको चमत्कार ! बिना चार्ज १०० वर्षसम्म निरन्तर बिजुली उत्पादन गर्न सक्ने आणविक ब्याट्रीको विकास



एजेन्सी । चिनियाँ वैज्ञानिकहरूले सयौं वर्षसम्म निरन्तर बिजुली उत्पादन गर्न सक्ने अत्याधुनिक आणविक ब्याट्री विकास गरेको दाबी गरेका छन् । यस ब्याट्रीको विशेषता यो हो कि यसले फोटोनिक सेल प्रयोग गर्दछ, जसले विद्यमान प्रतिस्पर्धी प्रविधिहरूको तुलनामा यसको कुल ऊर्जा रूपान्तरण क्षमता हजारौं गुणा बढाउँछ । यो अनुसन्धान प्रतिष्ठित वैज्ञानिक जर्नल "नेचर" मा प्रकाशित भएको छ ।

ब्याट्रीको विकास गर्ने टोलीले रेडियोएक्टिभ आइसोटोपको क्षय हुँदा उत्पादन हुने अल्फा रे प्रयोग गरेको थियो । हालसम्म यस क्षेत्रमा भएका धेरैजसो अनुसन्धानहरू बिटा विकिरणमा केन्द्रित छन्, तर चिनियाँ वैज्ञानिकहरूले अल्फा विकिरणको शक्तिशाली सम्भावनालाई प्रयोग गरेर नयाँ प्रविधितर्फ लागेका छन् ।

अल्फा विकिरणको कारणले क्षमता बढ्यो

अन्वेषकहरूका अनुसार अल्फा-रेडियो आइसोटोपको उच्च विकिरण ऊर्जा स्तर, जुन ४ देखि ६ मेगा इलेक्ट्रोन भोल्टको दायरा हो, माइक्रो-न्युक्लियर ब्याट्रीहरूको लागि धेरै प्रभावकारी साबित हुन सक्छ । तुलनात्मक रुपमा बिटा-रेडियो आइसोटोपको ऊर्जा स्तर धेरै कम छ, केवल केही हजार किलोइलेक्ट्रोन भोल्ट पुग्छ । यद्यपि, ठोस पदार्थहरूमा अल्फा कणहरूको प्रवेश धेरै कम हुन्छ, जसको कारणले आत्म-अवशोषणको समस्या उत्पन्न हुन्छ र ऊर्जाको ठूलो भाग क्षय गराउँछ ।

यस अनुसन्धानका प्रमुख वैज्ञानिक सुझाउ विश्वविद्यालयका प्रोफेसर वाङ शुयाओ भन्छन्, स्व-अवशोषणका कारण अल्फा-रेडियो आइसोटोपमा आधारित ब्याट्रीको उत्पादन क्षमता अपेक्षाभन्दा कम हुन्छ । आणविक फोहोर व्यवस्थापन र आपतकालीन प्रतिक्रिया प्रोटोकलहरूमा महत्त्वपूर्ण योगदान पुर्‍याउने वाङले अब आफ्ना साझेदार संस्थाहरूसँग मिलेर यो चुनौतीलाई सम्बोधन गर्न एउटा आणविक ब्याट्रीको विकास गरेका छन् जसले ऊर्जाको प्रयोगलाई अनुकूलन गर्न विशेष तह थपेको छ ।

फोटोनिक सेल जस्ता प्रविधिको प्रयोग

पोलिमर लेयर रहेको यो नयाँ ब्याट्रीमा 'इनबिल्ट इनर्जी कन्भर्टर' नामक प्रविधि प्रयोग गरिएको छ । यो तहले प्रकाशलाई ऊर्जामा परिणत गर्छ र त्यसपछि यसलाई सौर्य प्यानल जस्तै बिजुलीमा परिणत गर्छ ।

अनुसन्धानका अनुसार २४३ एएम नामक रेडियोधर्मी रासायनिक तत्वको ११ माइक्रो क्युरी मात्र प्रयोग गरी यो ब्याट्रीले अल्फा रे (रेडियोल्युमिनेसेन्स) बाट उत्पन्न हुने प्रकाशलाई विद्युतमा परिणत गरेको थियो । यस प्रक्रियाको ऊर्जा रूपान्तरण दक्षता ३.४३ प्रतिशत रहेको पाइएको थियो, जुन अत्यधिक प्रभावकारी मानिन्छ ।

दीर्घकालीन प्रयोग र उच्च स्थिरता

यो आणविक ब्याट्रीले रेडियोएक्टिभिटीलाई विद्युतीय उर्जामा परिणत गर्ने र यसको आयु निकै लामो हुने अनुसन्धानकर्ताहरुले दावी गरेका छन् । यो ब्याट्री तापक्रमको उतारचढावबाट पनि अप्रभावित रहन्छ । ब्याट्रीको समग्र ऊर्जा रूपान्तरण दक्षता ०.८८९ प्रतिशत मापन गरिएको छ र यसले प्रति क्युरी १३९ माइक्रोवाट उत्पादन गर्छ ।

यस ब्याट्रीको प्रदर्शन लगातार २०० घण्टाको परीक्षणको समयमा लगभग अपरिवर्तित रह्यो । २४३ एएमको हुनाले ब्याट्रीको जीवन समान रूपमा लामो हुन सक्छ ।

आणविक ब्याट्रीमा ऐतिहासिक सफलता

चीनको प्रमुख विज्ञान तथा प्रविधि पत्रिका "साइन्स एण्ड टेक्नोलोजी डेली" ले यो उपलब्धिलाई विगत केही दशकहरूमा आणविक ब्याट्रीको क्षेत्रमा सबैभन्दा महत्त्वपूर्ण उपलब्धिको रूपमा वर्णन गरेको छ । यो प्रविधिले आणविक सुरक्षा र दिगो विकासको लागि चीनको रणनीतिक आवश्यकताहरू मात्र पूरा गर्दैन, तर आणविक फोहोरको पुनः प्रयोगको लागि नयाँ दृष्टिकोण पनि खोल्छ ।

अखबारका अनुसार, यो सफलताले एक्टिनाइड आइसोटोपहरू प्रयोग गर्ने नयाँ तरिकाहरू खोल्छ जुन अहिले सम्म आणविक ईन्धन चक्र बाहिर कम आँकलन गरिएको थियो । यो ब्याट्रीले लामो आयु मात्र प्रदान गर्दैन, तर उच्च ऊर्जा दक्षता पनि प्रदान गर्दछ, जसले भविष्यमा दिगो ऊर्जा स्रोतहरूमा क्रान्ति ल्याउन सक्छ ।

# शुद्ध वा अशुद्ध तोरीको तेल पहिचान गर्ने ६ उपाय



हामी हरेक दिन खाना पकाउन धेरै प्रकारका तेलहरू प्रयोग गर्छौं । कोही परिष्कृत तेल, कोही जैतुनको तेल र धेरैले तोरीको तेल प्रयोग गर्छन् । तोरीको तेलमा तरकारी, मासु र माछा पकाउँदा स्वादमा निखारता आउँछ । तोरीको तेल वर्षौंदेखि प्रयोग हुँदै आएको छ । तर, आजभोलि खाद्यवस्तुमा यति धेरै मिसावट भइरहेको छ कि हामीलाई थाहा छैन के स्वस्थ्यकर के हो ? कतिपयले घ्यूमा अन्धाधुन्ध मिसावट गरिरहेका छन्, तोरीको तेल पनि यसबाट अछुतो छैन । अब तोरीको तेल बढी प्रयोग गर्नेहरुले तोरीको तेल वास्तविक हो कि नक्कली थाहा पाउनु पर्छ ।

तोरीको तेल असली वा नक्कली कसरी चिन्ने ?

१. यदि तपाइँ तोरीको तेल प्रयोग गर्नुहुन्छ भने, यसको शुद्धता पहिचान गर्न फ्रिजमा तेलको बाकस राख्नुहोस् । यदि यसमा ताडको तेल छ भने, यो बोतलको फेदमा गएर बस्छ । तोरीको तेल माथि रहनेछ । वास्तवमा, ताडको तेल चिसो ठाउँमा जम्छ । तोरीको तेलमा यस्तो हुँदैन ।

२. खुट्टा र हातमा तोरीको तेल लगाउनुहोस्। यदि हात र खुट्टामा रग्दा रङ्ग देखा पर्यो भने, त्यसमा मिसावट भएको बुझ्नुहोस् । शुद्ध तोरीको तेलमा रंग वा रासायनिक गन्ध हुँदैन, तर तिखो गन्ध हुन्छ, जुन तताउँदा आँखामा पिरो हुन्छ ।

३. ब्यारोमिटरबाट परीक्षण गर्न सकिन्छ । यदि तेल वास्तविक छ भने ब्यारोमिटर रिडिंग ५८ देखि ६० को बीचमा हुन सक्छ । यदि रिडिङ यो भन्दा बढी छ भने यो तेल नक्कली हो । तेलमा अन्य सस्तो तेल मिसाइएको हुन सक्छ । राम्रो कम्पनीबाट तेल किन्नु राम्रो हुन्छ । कतिपय पसलले खुला क्यानमा तेल पनि बेच्ने गरेका छन् ।

४. तोरीको तेलमा नाइट्रिक एसिड मिलाएर हेर्नुहोस् । यदि रंग परिवर्तन भयो भने नक्कली हो, अन्यथा तेल शुद्ध र वास्तविक हो । नाइट्रिक एसिड तेलमा मिसाउँदा रङमा परिवर्तन देखिन सक्छ । कचौरामा तोरीको तेल र नाइट्रिक एसिडका केही थोपा मिसाएर यो परीक्षण गर्न सकिन्छ ।

५. प्यानमा तेल तताउँदा त्यसबाट निस्कने धुवाँमा ध्यान दिनुहोस् र गन्ध महसुस गर्नुहोस् । यदि बाक्लो धुवाँ बाहिर निस्कन्छ र आँखा पोल्यो भने तेल वास्तविक हुन सक्छ । तोरीको तेलको गन्ध कडा र तिखो हुन्छ । नक्कली तेलको गन्ध धेरै हल्का हुन्छ । त्यसमा केही मिसावट भएको छ ।

६. शुद्ध तोरीको तेलको रंग सुनौलो र गाढा पहेंलो हुन्छ, यसमा चमक हुन्छ । नक्कली तेलको रंग हेर्दा हल्का हुनेछ ।



# युवाहरूमा हृदयघातका घटना बढ्दै, कुन उमेरमा बढी जोखिम ?



एजेन्सी । विश्व मुटु दिवस (विश्व मुटु दिवस २०२४) हरेक वर्ष सेप्टेम्बर २८ मा मनाइन्छ । यसको उद्देश्य मुटु सम्बन्धी स्वास्थ्यका बारेमा मानिसहरूलाई सचेत गराउनु हो । पछिल्लो समय तपाईले धेरै यस्ता तस्बिर र भिडियोहरू देख्नु भएको होला जसमा मानिसहरु हिड्दा, जिम जाँदा वा रेस्टुरेन्टमा खाना खाँदा हृदयाघातबाट ज्यान गुमाएको हुन्छ । केही वर्षअघिसम्म हृदयाघातलाई वृद्धवृद्धाको रोग मानिन्थ्यो तर अहिले युवामा पनि हृदयघात वा कार्डियक अरेस्ट हुने गरेको छ ।

आखिर किन युवाहरुमा हृदयाघातका घटना बढिरहेका छन्, हृदयाघात र कार्डियक अरेस्टमा के फरक छ, के के छन् चेतावनीका संकेत ? जान्नुहोस् यस्ता सामान्य प्रश्नको उत्तर...

प्रश्नः युवाहरूमा हृदयघातका घटनाहरू किन बढ्दै छन् ?

उत्तरः यसको सबैभन्दा ठूलो कारण अस्वस्थ जीवनशैली र खानपान हो । अधिकांश युवाको न सुत्ने र उठ्ने समय हुन्छ न खाने बानी नै । खाना के हो थाहा पनि छैन । आकाश हेल्थकेयरका कार्डियोलोजी विभागका वरिष्ठ सल्लाहकार डा. सुकृति भल्लाले दिल्ली, मुम्बई वा बेंगलुरु जस्ता शहरहरूमा बस्ने युवाहरूलाई हृदय रोगको उच्च जोखिममा रहेको बताउँछन् । किनभने तिनीहरू अस्वस्थ जीवनशैली अपनाउन बाध्य छन् । जंक फूडमा निर्भर हुनु, व्यायाम गर्न नसक्ने । यसले मोटोपना देखि हृदयघात सम्मका धेरै रोग निम्त्याउँछ ।

मदिरा र धुम्रपान पनि युवामा मुटुरोग बढ्दै गएका दुईवटा कारक रहेको डा सुकृति बताउँछिन् । धेरै युवाहरूले चुरोटको सट्टा ई-चुरोट अपनाउँछन् । यो उत्तिकै खतरनाक छ । धुम्रपानले कुनै पनि रूपले मुटुलाई हानि पुऱ्याउँछ ।

प्रश्नः कुन उमेरमा हृदयाघातको बढी जोखिम हुन्छ ?

उत्तरः सामान्यतया ४५ वर्ष वा सोभन्दा माथिका पुरुष र ५५ वर्ष वा सोभन्दा माथिका महिलालाई हृदयघात हुने सम्भावना बढी हुन्छ । तर, अहिले ४० वर्ष मुनिका महिला र पुरुष पनि हृदयघातको सिकार हुने गरेका छन् ।

प्रश्नः हृदयघात र कार्डियक अरेस्टमा के फरक छ ?

उत्तरः मुटुमा रगत नपुगेपछि जसलाई पनि हृदयघात हुन्छ । यसका लागि अवरोध जस्ता धेरै कारणहरू हुन सक्छन् । जबकि कार्डियक अरेस्ट भनेको तपाईको मुटुको धड्कन अचानक बन्द हुनु हो । त्यस्तै तेस्रो समस्या पनि हुन्छ जसलाई हृदयघात भनिन्छ । यस्तो अवस्थामा मुटुले राम्रोसँग रक्तसञ्चार गर्न सक्दैन ।

प्रश्नः के युवाहरूलाई हृदयघात हुन्छ ?

उत्तरः कार्डियक अरेस्टका धेरैजसो घटना युवाहरूमा देखिएका छन् । पीएसआरआई अस्पतालका इन्टरभेन्शनल कार्डियोलोजीका वरिष्ठ कन्सल्टेन्ट र प्रमुख डा मनिष अग्रवाल भन्छन् कि कार्डियक अरेस्टका बिरामीलाई २ देखि ३ मिनेटभित्र सीपीआर दिइयो भने उनको बाँच्ने सम्भावना ५० प्रतिशतले बढ्छ ।

प्रश्नः हृदयघातको चेतावनी संकेत वा लक्षणहरू के हुन् ?

उत्तरः छाती दुख्नेः यो सबैभन्दा सामान्य लक्षण हो । यो दुखाइ दबाब, कठोरता वा जलन जस्तो महसुस हुन सक्छ ।

सास फेर्न कठिनाईः हृदयघात हुँदा सास फेर्न गाह्रो हुन्छ । सास फेर्न गाह्रो भएजस्तो ।

हात, घाँटी वा बङ्गारा दुख्नेः कहिलेकाहीँ हृदयघातको कारण हात, घाँटी वा बङ्गारामा पनि महसुस हुन सक्छ ।

चक्कर लाग्नु वा बेहोस हुनुः हृदयघात हुँदा रक्तचाप कम हुन सक्छ । चक्कर लाग्ने वा बेहोस हुन सक्छ ।

अत्याधिक पसिना आउनुः हृदयाघातको बेला अत्यधिक पसिना आउनु सामान्य कुरा हो ।

वाकवाकी वा बान्ताः हृदयघात हुँदा केही मानिसहरूलाई वाकवाकी वा वाकवाकी लाग्न सक्छ ।

डा. सुकृति भल्ला भन्छिन्, 'युवामा हृदयाघातका लक्षण प्रायः वृद्धवृद्धासँग मिल्दोजुल्दो भए पनि सुरुमा मानिसले चिन्न सक्दैनन् । किनभने यी लक्षणहरू हल्का हुन्छन् । जस्तै अत्यधिक थकान, सास फेर्न गाह्रो हुनु, मुटुको धड्कन छिटो वा अनियमित हुनु, बिना कारण सुन्निने र तौल बढ्नु आदि ।

प्रश्नः के पुरुष र महिलामा हृदयघातका लक्षणहरू फरक हुन्छन् ?

उत्तरः हो । महिलाहरुमा हृदयघातका लक्षणहरु पुरुषहरु भन्दा अलि फरक हुन सक्छन् । उदाहरणका लागि, महिलाहरूमा हृदयघातका लक्षणहरू जस्तै ढाड दुख्ने, वाकवाकी लाग्ने, बेहोस हुने, थकान, अनिद्रा, सास फेर्न गाह्रो हुने र चक्कर लाग्ने जस्ता लक्षणहरू हुन सक्छन् ।

प्रश्नः हृदयघात र ग्यास दुखाइ कसरी पहिचान गर्ने ?

उत्तर : धेरै पटक मानिसले हार्ट अट्याकलाई ग्यास दुखाइ भन्दै बेवास्ता गर्छन् । हृदयघातको दुखाइ सामान्यतया छातीको बीचमा वा बायाँ छेउमा महसुस हुन्छ, जबकि ग्यास दुखाइ माथिल्लो वा तल्लो पेटमा केन्द्रित हुन सक्छ । अर्को भिन्नता यो हो कि हृदयघातको दुखाइ अक्सर हात, घाँटी, जबडा वा पछाडि फैलिन्छ, जबकि ग्यास सम्बन्धी दुखाइ छातीमा सीमित हुन्छ ।

# पेट्रोल पम्पमा तेल भर्दा मिटरमा "०" मात्र होइन यो पनि जाँच्नुहोस् ।




एजेन्सी । पेट्रोल पम्पमा डिजेल वा पेट्रोल भर्ने क्रममा कर्मचारीले हातपात गरेको खबर पनि आउने गरेको छ । कम तेल भर्ने धेरै गुनासो छन् । पेट्रोल वा डिजेल भर्दा इन्धन डिस्पेन्सर मेसिनको मिटरमा शून्य देखेर सही मात्रामा इन्धन पाइन्छ भन्ने सोच्नुहुन्छ भने तपाई गलत हुनहुन्छ । कहिले तेलको शुद्धतामा गडबडी हुन्छ त कहिले अर्कै खेल चलिरहेको हुन्छ ।

केन्द्र सरकारको उपभोक्ता मामिला विभागले पनि पेट्रोल पम्पमा तेल भर्दा ग्राहक बढी सचेत हुनुपर्ने कुरा पटक पटक दोहोऱ्याएको छ । यदि तपाईं ती व्यक्तिहरू मध्ये एक हुनुहुन्छ जो इन्धन डिस्पेन्सर मेसिनमा शून्य देखेपछि मात्र खुसी हुनुहुन्छ भने, सावधान रहनुहोस् ।

तपाईं जम्प चालको शिकार बन्न सक्नुहुन्छ

कहिले पेट्रोलमा ० पछि १ रुपैया देखाउँछ भने सिधै ५ देखाउँछ । यदि मध्य २, ३ र ४ देखाइएको छैन भने तपाईं जम्प चालको शिकार हुन सक्नुहुन्छ । यसबाट लाखौं जनता ठगिएका छन् । यसले तपाईंलाई कम तेल दिन्छ ।

जम्प चाल विरुद्ध कसरी उजुरी गर्ने

यदि तपाईंसँग यस्तो घटना भयो भने, तपाइँ गुनासो गर्न सक्नुहुन्छ । मेसिनमा कुनै खराबी देखिएमा सो पेट्रोल पम्पको लाइसेन्स खारेज गर्न सकिनेछ ।

घनत्वमा पनि ध्यान राख्नुहोस्

पेट्रोल र डिजेलको घनत्वमा पनि ठगी हुन सक्छन् । यो घनत्व मेसिनको डिस्प्लेमा मात्रा र भोल्युम पछि तेस्रो लाइनमा देखिन्छ ।

## विपद्मा.....

यात्रामा निस्कनु अघि सम्बन्धित जिल्ला प्रहरी कार्यालयमा सम्पर्क गर्न आग्रह गरिरहेको छ । सत्तामा रहेका र प्रतिपक्षमा रहेका दलहरूका देशभर विद्यार्थी, युवादेखि विभिन्न जनवर्गीय संगठनहरू छन् । तर, उनीहरूले बाढी-पहिरोले जनधनको ठूलो क्षति पुऱ्याएको तीन दिन बित्दा पनि अवरुद्ध सडक खुलाउन भ्रातृ संगठनहरूलाई परिचालन गरिसकेका छैनन् ।

यद्यपि, सत्ता साझेदार दल नेपाली कांगेस र प्रमुख प्रतिपक्षी नेकपा माओवादी केन्द्रले भने पार्टी पंक्तिलाई राहत तथा उद्धारमा खटाउने र पुनर्निर्माणमा केन्द्रित गर्ने निर्णय गरेका छन् । अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड' निवास खुमलटारमा आइतबार बेलुका बसेको माओवादी केन्द्रको केन्द्रीय पदाधिकारी बैठकले पार्टी पंक्तिलाई राहत पुनर्निर्माणमा केन्द्रित गर्ने निर्णय गरेको छ ।

माओवादी पदाधिकारी बैठकले पार्टी सदस्य र निर्वाचित जनप्रतिनिधिहरूबाट राहत कोषमा आर्थिक जम्मा गर्ने र पार्टी पंक्तिलाई राहत पुनर्निर्माणमा केन्द्रित गर्ने निर्णय गरेको हो । बैठकले दीर्घकालीन पुनःस्थापना र पुनर्निर्माणका लागि आवाज उठाउने लगायतका निर्णय पनि गरेको छ ।

यस्तै सत्ता साझेदार कांग्रेस कार्यसम्पादन समिति बैठकले पनि पार्टीको '१०० दिने विशेष अभियान' को पूर्वनिर्धारित कार्यक्रम कोजाग्रत पुर्णिमासम्म स्थगित गर्दै कार्यक्रमका लागि खटिएका केन्द्रीय प्रतिनिधिहरूलाई आफू खटिएको जिल्लामा उद्धार र राहतको कार्यमा आवश्यक समन्वय गर्न/गराउन निर्देशन दिएको छ । कांग्रेसले तीनै तहका जनप्रतिनिधि तथा चुनावमा पार्टीका तर्फबाट उम्मेदवार बनेका नेताहरू र भ्रातृ तथा शुभेच्छुक संस्थाका सबै तहका नेता-कार्यकर्ताहरूलाई पनि उद्धार र राहतमा समर्पित ढंगले क्रियाशील हुन भनेको छ ।

यसअघि कांग्रेस सभापति शेरबहादुर देउवाले शनिबार नै स्थानीय पार्टी पङ्क्तिलाई सक्रियतापूर्वक उद्धार र राहतको कार्यमा संलग्न हुन निर्देशन दिएका थिए । लगातारको वर्षापछि आएको बाढी-पहिरोले जनजीवन प्रभावित भएपछि उनले शनिबार प्रेस विज्ञप्तिमार्फत् स्थानीय पार्टी पङ्क्तिलाई सक्रियतापूर्वक उद्धार र राहतको कार्यमा संलग्न हुन निर्देशन दिएका हुन् ।

प्रतिपक्षमा रहेको दल राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा) ले गत वर्ष नै उद्धार र राहतमा खट्ने गरि द्रुत कार्यटोली (र्‍यापिड एक्सस टीम, आरएटी) गठन गरेको थियो । तर, पुराना दलहरूका भ्रातृ संगठनहरू जस्तै उसको 'द्रुत कार्यटोली' पनि राहत तथा उद्धारमा कतै देखा परेको छैन । रास्वपाले आइतबार केन्द्रीय समितिको बैठक बोलाएर सरकार प्राकृतिक विपत्तिको तयारीमा चुकेको निष्कर्ष भने निकालेको छ । पार्टी कार्यालयमा बसेको बैठकले सरकार रास्वपा सभापति रवि लामिछानेलाई आरोप लगाउन केन्द्रित हुँदा विपत्तिको सामना गर्न चुकेको दाबी गऱ्यो ।

पार्टी प्रवक्ता मनिस झाले सरकार, गठबन्धन, गठबन्धन आबद्ध दल र राजनीतिक कार्यकर्ताले रास्वपा, सभापति लामिछाने र सहकारीबाहेक अरू केही नसोच्दा समस्या आएको आरोप लगाएका छन् । यस्तै सत्ताको नेतृत्व गरिरहेको नेकपा एमालेले विपदबारे छलफल गर्न सोमबारसम्म पनि पार्टीको औपचारिक बैठक बोलाएको छैन । प्रधानमन्त्रीसमेत रहेका पार्टी अध्यक्ष केपी शर्मा ओली मुलुकबाहिर रहेका कारण एमालेले औपचारिक रुपमा पार्टीको बैठक बोलाउन ढिलाइ गरेको अनुमान गरिएको छ ।

यद्यपि, एमाले महासचिव शंकर पोखरेलले आइतबार प्रेस विज्ञप्तिमार्फत् पार्टीका विभिन्न तहका कमिटीहरूलाई निर्धारित कार्यक्रम स्थगन गरी खोज, उद्धार र राहतका काममा सक्रियतापूर्वक लाग्न भने निर्देशन दिएका थिए । 'यो विपद्को घडीमा बाढी, पहिरो र डुबानबाट प्रभावित भएका प्रदेश, जिल्ला र मातहतका पार्टी कमिटीहरूले निर्धारित कार्यक्रम स्थगन गरी खोज, उद्धार र राहतका काममा सक्रियतापूर्वक लाग्न निर्देशित गरिन्छ,' विज्ञप्तिमा भनिएको छ ।

यस्तै मौसम विज्ञान तथा पूर्वानुमान महाशाखाले दशैंको सेरोफेरोमा समेत मनसुनी वर्षा सक्रिय हुने अनुमान गर्दै सम्पूर्ण देशबासीमा सचेत रहन आग्रह गरेको छ । साथै राज्य संयन्त्र पनि आउने विपद्बाट तयार रहन आवश्यक छ ।

## संस्कृतिकर्मी..

विद्यार्थीहरुले सस्तोमा गुणस्तरीय शिक्षा लिने अवसर पाइरहेको र ख्वप विश्वविद्यालय सञ्चालनले सस्तोमा मेडिकल शिक्षा प्राप्त गर्ने अवसर पाउने उनको धारणा थियो ।

कोभिड र डेङ्गु संक्रमण अहिले पनि चुनौतीको विषय बनिरहेको बताउँदै सांसद सुवालले नागरिकलाई स्वस्थ राख्न सरसफाइ र खेलकुदलाई प्राथमिकतामा राख्नु उचित हुने विचार राखे । आन्तरिक पर्यटन प्रवर्द्धनमा जोड दिनुपर्ने विचार राख्दै उनले नयाँ पुस्तालाई सांस्कृतिक अतिक्रमणबारे सजग पार्नुपर्ने बताए ।

भक्तपुर नगरपालिकाले सञ्चालन गरेको छिकोङ व्यायाम श्वासप्रश्वाससँग सम्बन्धित शारीरिक व्यायाम भएको र यो व्यायाम सम्पूर्ण उमेर समूहको लागि फलदायी भएको उनको भनाइ थियो । संस्कृति भनेको सभ्यताको विकास हो र यहाँको कला संस्कृति, सम्पदा आदि संरक्षणले नयाँ पुस्ताको सेवा हुने धारणा व्यक्त गरे ।

काठमाडौं केन्द्रित विकासले उपत्यकाको जनसंख्या अत्यधिक बढेको र धेरै समस्याहरु पनि निम्तिएको बताउँदै सांसद सुवालले पश्चिम नेपालको विकास गर्न नेपालको राजधानी दाङमा सानुपर्ने धारणा राखे । उनले सबै नागरिकले समानतापूर्वक बाँच्न पाउने अधिकार सुनिश्चितता गर्न सरकारले जोड दिनुपर्ने पनि बताए ।

कार्यक्रमका सभापति भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले विश्व पर्यटन दिवसको अवसरमा पुरस्कृत हुने सबैमा बधाई एवम् धन्यवाद व्यक्त गरे । भक्तपुरलाई पर्यटकीय गन्तव्यस्थलको रुपमा विकास गर्न भक्तपुर नपाले संविधान र कानुनले दिएको अधिकार क्षेत्रभित्र रहेर काम गर्दै आएको बताउँदै भक्तपुर नपामा गत वर्ष १ लाख ४६ हजार विदेशी पर्यटकहरुले भक्तपुर भ्रमण गरेको जानकारी दिए ।

भक्तपुर नपाले २०८१ मंसिर २८ देखि पुस २ गतेसम्म ५ दिने भक्तपुर महोत्सव गर्ने तयारी गरिरहेको बताउँदै प्रमुख प्रजापतिले भक्तपुर महोत्सव भव्य रुपमा सम्पन्न गर्न सबैको साथ र सहयोग रहने विश्वास व्यक्त गरे । भक्तपुरका मूर्त अमूर्त सम्पदाहरु भक्तपुरका सम्पत्ति हुन् भन्दै उनले ती सम्पत्ति लोप हुनु भनेको राज्यको निम्ति ठूलो क्षति हुने बताउँदै सबै जाति, धर्म र संस्कृति रक्षा गर्नु राज्यको जिम्मेवारी र कर्तव्य भएको धारणा राखे ।

त्यस्तै नेमकिपाका केन्द्रीय सदस्य सुरेन्द्रराज गोसाइँले पर्यटन प्रवर्द्धनको निम्ति शान्ति र सुरक्षा अपरिहार्य विषय भएको बताउँदै सांस्कृतिक, साहित्यिक, सामाजिक र राजनीतिक गतिविधिलाई सँगसँगै अगाडि बढाउन सके जनताको चेतनास्तर अभिवृद्धिमा टेवा पुग्ने बताए । प्रगतिशील साहित्य, राजनीति र संगठन भनेको सभ्य जातिको कला, संस्कृति संरक्षण गर्ने सशक्त माध्यम भएको बताउँदै उनले भक्तपुर सांस्कृतिक नायक र गुरुहरुको सहर भएको धारणा राखेका थिए । संरा अमेरिकाको आडमा संसारका धेरै देशहरुमा युद्ध जारी रहेको प्रसंग जोड्दै सांसद गोसाईले साम्राज्यवादी देशले संसारमा गरिरहेको नरसंहार र हमलाको विरोधमा लेखक तथा कलाकारहरुले आफ्नो कलम चलाउनु सान्दर्भिक हुने विचार व्यक्त गरे । उनले भक्तपुर नपाले सांस्कृतिक गुरु र संस्कृतिकर्मीलाई सम्मान गर्ने परम्परालाई आगामी दिनहरुमा पनि निरन्तरता दिने विश्वास व्यक्त गरे ।

भक्तपुर नपाका उप्रमुख रजनी जोशीले भक्तपुरको पहिचानसँग सम्बन्धित मूर्त र अमूर्त संस्कृति नयाँ पुस्तामा पुस्तान्तरण गर्ने लक्ष्यका साथ यहाँका संस्कृतिकर्मीहरुलाई प्रोत्साहनस्वरुप सम्मान कार्यक्रम आयोजना गर्दै आएको बताए । भक्तपुर नपाले विदेशी पर्यटकहरुबाट उठाउँदै आएको पर्यटन शुल्कबाट नगरको सन्तुलित ढंगले विकास गर्दै आज देशकै सफल स्थानीय तहको रुपमा आफ्नो पहिचान बनाउन सफल भएको बताए ।

भक्तपुर जिल्लाका प्रमुख जिल्ला अधिकारी रोशनी कुमारी श्रेष्ठले पर्यटन उद्योग नेपालको अर्थतन्त्रको महत्वपूर्ण स्रोत भएको बताउँदै पर्यटन उद्योगको प्रवर्द्धनमा राज्यको लगानी आवश्यक रहेको धारणा राखे । भक्तपुरले यहाँको मौलिकता जोगाउन गरिएका सांस्कृतिक गतिविधिहरु प्रशंसनीय भएको बताउँदै उनले भक्तपुरले पनि पर्यटकहरु लक्षित होम स्टेहरु सञ्चालन गरी पर्यटकहरुको बसाई लम्ब्याउनेतर्फ जोड दिनुपर्ने धारणा व्यक्त गरे ।

संस्कृतिविद् विश्वमोहन जोशीले पर्यटन दिवस मनाउनुको इतिहास र उद्देश्यबारे प्रष्ट पार्दै सांस्कृतिक सम्पदा, ऐतिहासिक गतिविधि, कला र संस्कृतिले पर्यटन प्रवर्द्धनमा महत्वपूर्ण भूमिका खेल्ने बताए । राष्ट्रिय कला संग्रहालयका अधिकृत यमुना महर्जनले भक्तपुर घुम्न आउने आन्तरिक र बाह्य पर्यटकहरुको आगमन उत्साहजनक रहेको बताउँदै भक्तपुरका लोपोन्मुख कला र संस्कृति संरक्षणमा भक्तपुर नपाको महत्वपूर्ण योगदान भएको बताए ।

भक्तपुर उद्योग वाणिज्य संघका अध्यक्ष रोशनी धौबन्जारले संस्कृतिकर्मी र सांस्कृतिक गुरु सम्मान कार्यक्रमले कलाकार र संस्कृतिकर्मीमा थप ऊर्जा र हौसला मिल्नेछ भन्दै भक्तपुर उद्योग वाणिज्य संघले भक्तपुर नपासँग सहकार्य र समन्वयमा यहाँको व्यापार व्यवसाय प्रवर्द्धनमा जोड दिँदै आएको बताए ।

वडा नं. ९ का वडाध्यक्ष रबिन्द्र ज्याख्वले यो वर्ष पनि प्रत्येक वडाबाट २ जना सांस्कृतिक गुरुहरुलाई उहाँहरुको योगदानको कदर गर्दै भक्तपुर नपाले सम्मान गरिएको र यो वर्षको गुन्हीपुन्ही सापारुमा विविध विधाअन्तर्गत १४२ सांस्कृतिक समूहले प्रतियोगितामा भाग लिएको जानकारी दिए ।

उक्त कार्यक्रममा प्रमुख अतिथि सुवालले पर्यटन पथप्रदर्शकहरु, व्यवसायी संस्था र सहयोगीहरुहरूलाई कदर पत्र प्रदान गरेको थियो । नगर प्रमुख प्रजापतिले २२ जना सांस्कृतिक गुरुहरूलाई दोसल्ला ओढाई नगद रु. २०,०००।- सहित सम्मान पत्र प्रदान गरेको थियो भने उत्कृष्ट कलाकारहरूलाई रु. ५००० नगद पुरस्कारबाट पुरस्कृत गरियो ।

कार्यक्रममा प्रतियोगितामा प्रथम स्थान हासिल गरेको कोलाछें प्याखं समूहको फाकंदली प्याखं, गलसी पुखु देवी प्याखं समूहको देवी प्याखं र याताव दाफा भजन मण्डल झौखेलको माक प्याखँ पनि देखाइएको थियो । गुन्हीपुन्ही सापारु २०८१ मा प्रदर्शन भएका घिन्ताङघिसी र माक प्याखँ तथा परम्परागत एवम् आधुनिक सांस्कृतिक विधामा मको लुसी प्याखं खल, भनपा ९ का विदिसा लवजू महिला उत्कृष्ट कलाकार, मुस्याख्व परिवार देवी प्याखं समूह भनपा ३ का लक्ष्मीप्रसाद मानन्धर उत्कृष्ट पुरुष पुरस्कार, सिद्धि गणेश प्याखं समूह भनपा ७ का विनेश खाइजु उत्कृष्ट बाल कलाकार, मंगलमाया वनमाला समेतको घिन्ताङघिसी समूह भनपा ७ का निर्देशक लक्ष्मीप्रसाद वनमाला उत्कृष्ट निर्देशक र च्वङ गणेश सांस्कृतिक समूह भनपा १ का साइला वैद्य उत्कृष्ट लेखकबाट सम्मानित भएको थियो ।

न.पा वडा नं १ बाट देवचन्द्र बज्राचार्य र मंगलबहादुर भैल, वडा नं २ बाट रामभक्त ब्यान्जु र विकुबहादुर पक्का, वडा नं ३ बाट हर्षविर धुख्वा र बद्रीभक्त खबुजा, वडा नं ४ बाट न्हुछेकुमार प्रजापति र चन्द्रबहादुर कपाली, वडा नं ५ बाट जगनाथ त्वानाबासु र ब्रम्हकाजी दर्शनधारी, वडा नं ६ बाट आसराम अवाल र गणेशबहादुर सुवाल, वडा नं ७ बाट नारायणभक्त वनमाला र मोतिलाल लाखाजु, वडा नं ८ बाट तुल्सीनारायण गोसाई र कृष्णगोपाल प्याथ, वडा नं ९ बाट तुल्सीभक्त कोजु र राजाराम श्रेष्ठ, वडा नं १० बाट रामचन्द्र सुवाल र काजीलाल मुलगुठी थिए ।

## निकोसेराको.....

सेन्टरबाट २० मिटर मापदण्ड छोडनुपर्छ । अहिले नयाँ नियम अनुसार थप २० मिटर थप छोड्नुपर्छ । यसरी दुवै साइट सडक र खोलाको मापदण्ड छोडनुपर्दा कुल साढे ५२ मिटर छोडनुपर्छ, जबकि खोला र सडकको विचको दुरी त्यति पनि छैन ।

भूमि अधिकार संरक्षण समितिका उपाध्यक्ष निशुल प्रजापतिले दुवैतिरको मापदण्ड हिसाव गर्दा वस्तीभित्र पक्की रुपमा बनेका ढलानका घरहरु मात्रै विस्थापित नभई दुवैतिरको मापदण्ड नै पुग्दैन । खोलाको ४० मिटर र सडकको साढे १२ मिटर गरेर कुल छोडनुपर्ने साढे ५२ मिटर हुन्छ, उनले भने, जबकि चौडाई साढे ५२ मिटर नै छैन ।

यहाँका वस्तीहरु निकोसेरा सडकको लहरै छ । लहरै ढलानका पक्की घरहरु बनेका छन् । तर पनि यतिबेलासम्म नगरपालिकाले सडकको मापदण्ड छोडेर घर बनाउन नक्सा पास दिइरहेको छ । उता खोलाको पनि मापदण्ड लागू गरेपछि ती घरहरु भत्काउनुपर्ने हुन्छ ।

संघर्ष समितिका सदस्य एवं स्थानीय महेश प्रजापतिले पहिला खोलाको मापदण्ड २० मिटर कायम हुँदा नै आफूहरुले विरोध जनाउँदै आएकोमा अहिले थप २० मिटर खोलाको मापदण्ड कुनै हालतमा मान्य नहुने बताए । यही कारण आफूहरु आन्दोलित भएको उनले सुनाए । आन्दोलनको क्रममा मध्यपुर थिमि नगरपालिका, वडा कार्यालयमा ज्ञापनपत्र बुझाउने मात्रै नभई सडक संघर्षका कार्यक्रमहरु पनि सञ्चालन गर्दै आएको उनले सुनाए । सासथै उपत्यकाव्यापी सडक विस्तार पीडित संघर्ष समितिसँग पनि समन्वय गरी उपत्यकाव्यापी आन्दोलनको क्रममा रहेको उनले सुनाए ।

स्थानीय पीडित मोहन प्रजापतिले आफूसँगै सात आना दुई पैसा जग्गा भएकोमा अहिले खोलाले २० मिटर लिएपछि आधी जग्गा बाँकी भएको र थप २० मिटर थपिंदा पूरै जग्गा जाने भएको पीडा सुनाए । मेरो नाममा जग्गा छ, त्यहीस्वरुप अहिले मैले गुठी संस्थानमा वर्षको २३ पाथी चामल बुझाउनुपर्छ, उनले भने, यो सबै जग्गा जाँदा पनि मैले त्यो कर तिररहनुपर्छ, अनि कसरी न्याय हुन्छ ।

उनको जग्गा एकल स्वामित्व नभई गुठीको पनि रहेकोले जग्गा नभए पनि कागजमा आफनो जग्गा रहने र त्यही कारण गुठीलाई बाली तिरिरहनुपर्ने भएको उनले बताए । स्थानीयले बताए अनुसार यस्तो समस्या त्यहाँ पाँच सय १३ रोपनी जग्गाधनीको छ । किनकि त्यहाँ पाँच सय १३ रोपनी जग्गा गुठीको नामको छ ।

त्यहाँका पीडितहरु मापदण्डले नलिदासम्म जग्गा आफूहरुले कमाई गर्दै आए पनि अहिले पनि बाली खान नपाएको दुःखेसो पोखे । प्रत्येक वर्ष हनुमन्तेको बाढी पसेर बालीनाली नष्ट गर्ने भएकोले बाली गरे पनि खान पाउने अवस्था नरहेको स्थानीयले बताए ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# ८० वर्षीया चोई मिस युनिभर्समा सहभागी !

तपाईं आफ्नो उमेरको ८० को दशकलाई कसरी बिताउन चाहनुहुन्छ? कसैले बगैंचा गोडमेल गर्लान्, कोहीले भाषा सिक्लान्, कोही यात्रामा निस्किएलान् र कोहीले बालबालिकासँग समय बिताउलान् । सायदै यो उमेर मोडलिङ करिअर सुरु गर्ने उद्देश्य बोकेर कोही अन्तर्राष्ट्रिय सौन्दर्य प्रतियोगितामा प्रवेश गर्ला ।

तर चोई सुन ह्वाको लागि यो कुनै दिमागी निर्णय थिएन । यस साता ८१ वर्षीया चोई आफूभन्दा झण्डै तेब्बर कान्छी महिलाहरुसँग मिस युनिभर्सको उपाधि जितेर आगामी वर्ष मेक्सिकोमा हुने फाइनलमा पुग्ने आशासहित त्याम्पमा उत्रिइन् । प्रश्न उठ्छ, किन ?

'बच्चा हुर्काइसकेपछि र कठिनाइहरु पार गरिसकेपछि, अब तपाईंले के गर्न चाहनुहुन्छ भनेर खोज्न आवश्यक छ' अस्पतालकी पूर्वकर्मचारीले स्टेजबाट ओर्लिएपछि बीबीसीलाई भनिन् । 'एकचोटि तपाईंले यो उपलब्धि हासिल गर्नुभयो भने यसले तपाईंको जीवन ऊर्जाशील बन्छ । यसले तपाईंको जीवनलाई अघि बढाउँछ । जसले सकारात्मक दृष्टिकोण र मानिससँग स्वस्थ सम्बन्ध प्रदान गर्छ । यसले तपाईंलाई कल्याण पनि गर्छ' उनले भनिन् ।

अस्पतालमा एक बिरामीले ७२ वर्षको उमेरमा पनि मोडलिङ गर्न सुझाव दिएपछि उनले मोडलिङलाई अँगालेकी हुन् । पछिल्ला वर्षहरुमा उनी दक्षिण कोरियामा परिचित अनुहार बनिसकेकी छिन् । उनी फेसन सप्ताहको रनवेमा समेत हिंडेकी छन् । तर उनलाई देशबाहिर करिअर सुरु गर्न गाह्रो छ ।

चोइ जन्मिएको नौ वर्षपछि सुरु भएको मिस युनिभर्स सौन्दर्य प्रतियोगिताले जब २८ वर्षभन्दा माथिकाले सहभागी हुन नपाउने नियम हटायो, तब चोइले भाग लिने निर्णय गरिन् । योसँगै उनी अहिलेसम्मकै वृद्ध प्रतियोगी बनिन् ।

'मैले कल्पना गर्न नसक्ने कुरा थियो यो' उनी भन्छिन्, 'मोडेलको रुपमा म धेरै वर्षदेखि अन्तर्राष्ट्रिय मञ्चमा पाइला चाल्ने इच्छा राख्दै थिएँ' चोइ भन्छिन्, 'यद्यपि, मेरो लागि कुनै स्पष्ट मार्ग वा निर्देशन थिएन, तर मिस युनिभर्स प्रतियोगितामा उमेरको कुनै प्रतिबन्ध नभएकाले मैले विश्वव्यापी चरणमा पुग्ने लक्ष्यका साथ भाग लिएँ ।'

विवाहित महिला, ट्रान्सजेन्डर महिला र एकल आमालाई भाग लिन अनुमति दिने निर्णयले हालैका वर्षमा मिस युनिभर्स प्रतियोगिता थप विविधतातर्फ अघि बढेको देखिएको छ । तर उनको प्रवेशले निकै हलचल ल्यायो ।

'मलाई देखेर सहभागी छक्क परे । जब उनीहरूले म ८० वर्षकी रहेको थाहा पाए, उनीहरूले प्रशंसा व्यक्त गर्दै भने, म तपाईं जस्तै बूढी हुन चाहन्छु' उनले स्वीकारिन् ।

यसले उनलाई आशा गरेजस्तै अन्तर्राष्ट्रिय चासो ल्याएको छ । चोईले विश्वभर मिडियाका हेडलाइन कमाएकी छन् ।

तर मेक्सिकोका लागि उनलाई टिकट काटिएको थिएन । बरु उनको सट्टामा २२ वर्षीया सुन्दरी हान एरियलले जितिन् । चोई पूर्णरुपमा खाली हात घर फर्किइनन्, तर 'बेस्ट ड्रेस'को उपाधि जितिन् ।

ताजका लागि प्रतिस्पर्धा गर्ने धेरै वृद्ध महिलामध्ये पहिलो हुने आशा राख्दै र सौन्दर्य मापदण्डलाई चुनौती दिने सोच राख्दै उनी भन्छिन्, 'सहभागी हुन सक्षम हुनु मात्र एउटा अचम्मको र सम्मानजनक अनुभव हो ।'

'यो अझै नयाँ भएकोले धेरै चर्चा छ । तर धेरै वयोवृद्ध महिलाले भाग लिन थालेपछि उनीहरूप्रतिको दृष्टिकोण परिवर्तन हुनेछ र त्यहाँ एक समय आउनेछ जब उनीहरुले विश्व प्रतियोगितामा प्रतिस्पर्धा गर्न सक्छन्' उनी भन्छिन्, 'तर अहिलेको लागि अझै पनि युवाहरूले स्टेज लिन समय छ ।'

त्यसपछि जे पनि हुन्छ, उनलाई थाहा छ कि उनका केही ठूला फ्यान २३ र २४ वर्षका नातिका रूपमा सधैं घरमा हुनेछन् ।

'मेरा नातिनातिनाहरूले मलाई यसो भन्दै हौसला दिन्छन्– 'हाम्री हजुरआमा एकदमै राम्रो, सुन्दर, सुन्दर र उत्कृष्ट हुनुहुन्छ !' उनी सुनाउँछिन् ।

- बीबीसीबाट

# नेपाली चलचित्र "शाम्बाला" ओस्कारका लागि सिफारिस

काठमाडौं । मीनबहादुर भाम निर्देशित फिल्म 'शाम्बाला' ले नेपालबाट आगामी ओस्कार अवार्डको लागि प्रतिनिधित्व गर्ने भएको छ । नेपालबाट ओस्कारका लागि शाम्बाला फिल्मले मात्र आवेदन दिएपछि अब यो फिल्म ओस्कारका लागि सिफारिस हुने निश्चित बनेको हो ।

आवेदन दिने विहिबार अन्तिम मिति रहेको र शाम्बाला बाहेक अन्य कुनैपनि फिल्मले आवेदन नदिएको ओस्कारको नेपाल छनोट समितिले जनाएको छ । नेपालको छनोट समितिले फिल्मलाई आगामी नोभम्बरसम्म अमेरिका पठाइसक्नु पर्नेछ ।

ओस्कार अवार्डको ९७औं संस्करण आगामी मार्च ३ मा अमेरिकाको लस-एन्जलसमा आयोजना हुँदैछ । यस अघि विभिन्न अन्तर्राष्ट्रिय फिल्म महोत्सव समेत प्रदर्शन भएर प्रशंसा बटुलेको 'शाम्बाला' शुक्रबारदेखि नेपाली हलमा प्रदर्शन भएको छ ।

यस फिल्मको केही दिनअघि मात्र काठमाडौंमा बलिवुडका चर्चित अभिनेता नवाजुद्दीन सिद्धिकी र निर्देशक अनुराग कश्यपको उपस्थितिमा प्रिमियर

# रोनाल्डोको गोलमा अल नासरको जित

एजेन्सी - क्रिस्टियानो रोनाल्डोले गोल गरेको खेलमा साउदी अरेबियाको अल नासरले एएफसी च्याम्पियन्स लिग एलिटको समूहचरणको खेलमा आफ्नो अपराजित यात्रा कायमै राखेको छ ।

कतारको अल रेयान क्लबलाई नासरले सोमवार भएको खेलमा २-१ ले पराजित गरेको छ ।

अल अवाल पार्क रियादमा भएको खेलमा नासरलाई जिताउन साडियो माने र रोनाल्डोले गोल गरे । रेयानका लागि भने रोजर गुएडेसले गोल गरे ।

पहिलो हाफको इन्ज्युरी समयमा मानेले गोल गर्दै नासरलाई अग्रता दिलाएका थिए । रोनाल्डोले ७६औं मिनेटमा गोल गर्दै टोलीको अग्रता दोब्बर बनाए ।

रेयानका लागि ८७औं मिनेटमा रोजरले गोल गर्दै टोलीलाई खेलमा फर्काउने प्रयत्न गरेपनि त्यो सफल हुन सकेन ।

रोनाल्डो आवद्ध नासर केही साता अघि पहिलो खेलमा इराकको अल-सर्टासँग १-१ गोलको बराबरीमा रोकिएको थियो ।

# एनपीएल खेलाडीको अक्सन असोज २० बाट

काठमाडौं । क्रिकेटको फ्रेन्चाइज प्रतियोगिता अन्तर्गत हुने नेपाल प्रिमियर लिग (एनपीएल) को खेलाडी छनोटका लागि यही असोज २० गते अक्सन हुने भएको छ । नेपाल क्रिकेट संघ (क्यान) ले असोज २० गते अक्सनको मिति निर्धारण गरेको जानकारी दिएको छ ।

अक्सनका लागि खेलाडीलाई ए, बी र सी ग्रेडमा वर्गीकरण गरिनेछ । क्यानले केही दिनअगाडि खेलाडीलाई अक्सनका लागि आफ्नो नाम दर्ताका लागि आह्वान गरेको थियो । टिममा समावेश हुने विदेशी खेलाडीलाई भने टिमहरुले सीधै अनुबन्धित गर्नेछन् ।

पहिलो संस्करणको एनपीएल आगामी मंसिर १५ देखि पुस ६ गतेसम्म क्यानको आयोजनामा हुने प्रतियोगितामा ८ टोलीको सहभागिता रहने आयोजक क्यानले जनाएको छ । ८ वटै टोलीको मार्की खेलाडी भने पहिले नै तय भइसकेको छ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY

वर्ष १८ | अङ्क १३ | ने.सं. ११४४ | कार्तिक १४ गते बुधबार, २०८१ | 30 Oct. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–




## राष्ट्रिय विभुती शंखधर साख्वाःको सम्मानमा पूर्व प्रम प्रचण्ड थिमि आउने



भक्तपुर । नेपाल कम्युनिष्ट पार्टी(माओवादी केन्द्र)का अध्यक्ष एवं पूर्व प्रधानमन्त्री पुष्पकमल दाहाल ‘प्रचण्ड’ भक्तपुर आउने भएका छन् । बिहीवार दिउँसो उनी भक्तपुरको नयाँ थिमि आउने भएका हुन् । नेपाल संवत अनुसार नयाँ वर्ष ११४५ को अवसरमा सो संवतका प्रवर्तक राष्ट्रिय विभुती शंखधर साख्वाःको सम्मानमा आयोजित कार्यक्रममा अध्यक्ष प्रचण्ड आउने कार्यक्रम तय भएको माओवादी केन्द्रको मध्यपुर थिमि नगर अध्यक्ष विजयकृष्ण श्रेष्ठले बताएका छन् । प्रचण्ड निवासमा सोमबार आफूहरु निम्ता दिन गएको र अध्यक्ष प्रचण्डले बिहीवारको कार्यक्रमका लागि सहर्ष समय उपलब्ध गराएका उनले बताए ।



सो अवसरमा नेकपा( माओवादी केन्द्र) का जिल्ला इन्चार्ज दिलिप प्रजापति भिष्म, केन्द्रीय सदस्य डिपी ढकाल, जिल्ला संयोजक सुनिल बासु र सचिव जीवन तज लगायतको सहभागिता रहेको सो पार्टीका मध्यपुर थिमि नगरका सचिव शिवसुन्दर श्रेष्ठले जानकारी दिए ।

नेकपा (माओवादी केन्द्र) को मध्यपुर थिमि नगर समितिले कात्तिक १५ गते बिहीवार दिउँसो राष्ट्रिय विभुती शंखधर साख्वाःको प्रतिमामा माल्यार्पण गर्ने तथा नेपाल सम्बत ११४५ को अवसरमा शुभकामना आदानप्रदानको कार्यक्रम आयोजना गरेको छ । सोही कार्यक्रममा सरिक हुन प्रमुख अतिथिका रुपमा पार्टी अध्यक्ष एवं पूर्व प्रधानमन्त्री प्रचण्ड आउने कार्यक्रम रहेको हो ।

अध्यक्ष प्रचण्डले शंखधर चोकस्थित राष्ट्रिय विभुती शंखधर

बाँकी पेज ७ मा

## भक्तपुरमा यसरी मनाइंदै छ स्वन्ती नखः

भक्तपुर । भक्तपुर नगरपालिकाले कार्तिक १४ गते काग तिहार, १५ गते कुकुर तिहार र लक्ष्मी पूजा, १६ गते म्हःपूजा र १७ गते किजा पूजा गरी मनाउन



यस वर्षको स्वन्ती नखः २०८१ मनाउने विषयमा बसेको बैठकले यस्तो निर्णय गरेको हो ।

बैठकमा भक्तपुर तलेजुका पूजारीहरु, राजोपाध्याय नाइके, जोशी नाइके, कर्माचार्य नाइकेहरु, ज्योतिषविद् लगायतका सरोकारवालाहरुसँग



आग्रह गरेको छ । नगर प्रमुख सुनिल प्रजापतिको अध्यक्षतामा बसेको बैठकले २०८१ कार्तिक

बाँकी पेज ७ मा

## सरकारका गलत कदमका विरुद्ध सडक र सदन दुबै मोर्चाबाट प्रतिवादः प्रचण्ड



नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल ‘प्रचण्ड’ले सरकारका गलत कदमका विरुद्ध सदन र सडक दुबै मोर्चाबाट प्रतिवाद गर्ने बताएका छन् । माओवादी केन्द्र बागमती, उपत्यका विशेष र सम्पर्क समन्वय प्रदेश समितिले काठमाडौंमा आयोजना गरेको खबरदारी सभालाई सम्बोधन गर्दै उनले प्रतिपक्षको खबरदारीलाई सामान्य रुपमा लिए सरकारले नसोचेको मूल्य चुकाउने चेतावनी पनि दिएका हुन् ।

आफ्नो नेतृत्वको सरकारले गरेको सुशासनका अभियानलाई सरकारले अवरुद्ध गरेको उल्लेख गर्दै उनले आफूलाई सच्याउन सरकारलाई आग्रह गरे । ‘नत्र संसद र सडकमा तपाइहरुले त्यो प्रतिरोध देख्नुपर्नेछ, जसको तपाइँहरुले कल्पना गर्नुभएको छैन’, अध्यक्ष प्रचण्डले भने, ‘ बाढीपहिरो र विपत्तिमा नदेखिने सरकार दल विभाजन गर्ने अध्यादेश ल्याउन, उपसभामुख हटाउन र विद्युत प्राधिकरणका कार्यकारी निर्देशक हटाउन देखिन्छ, यो हर्कत सरकारका लागि महंगो पर्ने छ।’

यो देश कांग्रेस एमालेको विर्ता नभएको उल्लेख गर्दै उनले संख्याको प्राविधिक बलमा जस्तोसुकै अपराध गरे पनि हुन्छ भन्ने कसैलाई लागेको भए तिनले त्यो भन्दा माथि जनता छन् भन्ने बिर्सेको टिप्पणी गरे । ‘जे गरे पनि हुन्छ भन्ने लाग्छ, जवाफ दिनुपर्दैन ?’- अध्यक्ष प्रचण्डले सरकारलाई प्रश्न

बाँकी पेज २ मा

# सिन्धुपाल्चोकका अवैध क्रसर उद्योग अनुगमन गर्दै प्रशासन !




काठमाडौं । सिन्धुपाल्चोक जिल्लामा सञ्चालित क्रसर उद्योगको स्थलगत अनुगमन सुरु भएको छ । सोमबार जिल्ला समन्वय समितिका प्रमुख बालकृष्ण श्रेष्ठ उपप्रमुख पदमनाथ नेपाल, प्रमुख जिल्ला अधिकारी किरण थापा, जिल्ला प्रहरी प्रमुख सन्तोष खड्का, राष्ट्रिय अनुसन्धान विभागका प्रमुख राजन प्रजापती, सशस्त्र प्रहरी बलका प्रमुख राजेश्वर खनाल, उद्योग तथा वाणिज्य कार्यालय सिन्धुपाल्चोकका प्रमुख त्रिपुरारी बखेल, कोष तथा लेखा नियन्त्रक कार्यालयका प्रकाश आचार्य, जिससका निमित्त जिल्ला समन्वय अधिकारी दीपा प्रधान, इन्जिनियर प्रशान्त अधिकारी, जिसस सचिवालयका प्रेम कुमार दङ्गाल, लोकप्रिय नेत्रज्योती सञ्चार समूहका प्रबन्ध निर्देशक नेत्र बहादुर बस्नेत सम्मिलित उच्चस्तरीय सरकारी टोलीले चौतारा साँगाचोकगढी नगरपालिका - ११ मा सञ्चालनमा आएका क्रसर उद्योगहरुको स्थलगत अनुगमन गरेको हो । अनुगमनका क्रममा प्रजिअ किरण थापाले चौतारा साँगाचोकगढी नगरपालिका - ११ मा मात्र होइन जिल्लाका क्रसर उद्योग, क्रसर उद्योग सञ्चालकले आसपासका खोलामा अनुगमन गरिने र अवैध रुपमा भएको उत्खननलगायतका बारेमा स्थलगत अनुगमन गरि आबश्यक कानुनी कार्बाही गरिने बताएका छन् । जिससका प्रमुख बालकृष्ण श्रेष्ठले हरेक पटक सम्झाउँदा पनि अटेर गरी गत वर्षको स्टक सामानहरु समेत नदेखाएकाले क्रसर उद्योगहरुमाथी स्थलगत अनुगमन गरी कानुन बिपरित गर्नेलाई कार्वाहीको दायरामा ल्याउँने बताए । उनले मापदण्ड विपरीत सञ्चालन गरिएका क्रसर उद्योगलाई कानुनको दायरामा ल्याउन स्थलगत अनुगमन सुरु गरिएको स्पष्ट पार्दै प्रक्रिया मिचेर सञ्चालन गरिएका क्रसर उद्योगलाई कारबाही हुने समेत जानकारी दिए । जिल्ला प्रहरी प्रमुख प्रहरी उपरिक्षक सन्तोष खड्काले जिल्लामा सञ्चालनमा रहेका क्रसर उद्योगका बारेमा व्यापक गुनासो आएकाले उच्चस्तरीय टोलीले अनुगमन थालेको बताए । उनले कतिपय क्रसर उद्योग सडकदेखि पाँच सय मिटरको दूरीभित्रै सञ्चालनमा ल्याइएको अवस्थामा फेला परेकाले त्यस्ता क्रसर उद्योगका बारेमा अब छिट्टै स्थानीय प्रशासनले प्रक्रिया थाल्ने जानकारी दिए । सिन्धु स्टोन एण्ड कन्ट्रक्सन, श्री कालिञ्चोक भगवती एग्रीगेट इन्डस्ट्रीज प्रालि बनदेउ क्रसर उद्योग र बच्छलादेवी एग्रीगेट क्रसर उद्योगहरुमा गरिएको अनुगमनका क्रममा अवैध रुपमा उत्खनन गरिएको बालुवा सहित टिपर आबश्यक कार्वाहीका लागि नियन्त्रणमा लिइएको छ भने बच्छलादेवी एग्रीगेटका सञ्चालक इन्द्र राज गिरीले नदीबाट बालुवा निकाल्नका लागि २ ड्रम डिजेल समेत नदीमा लगेको र अनुगमनका क्रममा स्काइभेटरलाई कुनामा नदेख्ने गरी लुकाएको भिडियो र फोटो खिचेपछि फोटो नखिच्न र भिडियो नबाउँन भन्दै पत्रकार नेत्र बस्नेत माथी अभद्र व्यवहारसमेत गरेको थियो । अनुगमनका क्रममा अरु क्रसर व्यवसायीहरुले नियमानुसार कार्य गर्ने प्रतिबद्धता जनाए पनि बछलादेवीका सञ्चालक गिरीले भने नगरपालिकाको लापरबाहीका कारण ठेक्का नलागेको, आफुले बुझाउँन पर्ने करसमेत नगरपालिकाले बुझ्न नमानेको बताउँदै खोलामा लुकाई राखेको स्काइभेटर र डिजेल नगरपालिकाको भएको बताए । खोलाको अनुगमन गर्न पर्दैन भन्दै गिरीले बिभिन्न बहाना बनाई अल्मल्याउँन खोजेपछि प्रजिअ र प्रहरी प्रमुख सहित खालामा स्थलगत अनुगमन गर्न गएपछि गिरी आक्रोसित बनेको थियो । सरकारले बर्षादको समयमा नदीजन्य पदार्थ उत्खननमा रोक लगाएको भएपनि लुकीछिपी उत्खनन् गरेर सामान जम्मा गरेको र असार मसान्तसम्म रहेको मौज्दातको परिणाम नबुझ्एर बाँकी भन्ने गरेका क्रसरहरुलाई कसरी कार्वाही हुन्छ हेर्न भने बाँकी रहेको छ । यस अघि जिल्ला प्रशासन कार्यालय, जिल्ला समन्वय समिती, उद्योग तथा वाणिज्य कार्यालय र डिभिजन वन कार्यालयले पनि पटक-पटक क्रसर उद्योगहरू अनुमगन गरेका छन् । अनुगमनसँगै प्रतिवेदन तयार हुने भएपनि त्यसको कार्यान्वयन नहुँदा अवैध क्रसर भने निर्वाध चलिरहेका छन् । क्रसर तथा बालुवा प्रशोधन उद्योग वन क्षेत्रबाट दुई किलोमिटर टाढा, नदी-खोला किनाराबाट पाँच सय मिटर, चुरे क्षेत्रबाट पन्ध्र सय मिटर, गाउँबस्तीबाट दुई किलोमिटर र राजमार्ग क्षेत्रबाट पाँच सय मिटर टाढा सञ्चालनमा हुनुपर्ने उल्लेख छ । सिन्धुपाल्चोकमा सञ्चालनमा रहेका कुनै पनि उद्योगहरूले यो मापदण्ड पूरा गरेका छैनन् । क्रसरले जथाभावी नदीको बहाब परिवर्तन गराई सार्वजनिक स्थलमा आफुले निजी जस्तै जथाभावी मेसीन लगाएर नदीजन्य पदार्थ बिक्री गर्ने गरेका कारण बस्ती जोखिममा परेको छन भने जता ततै पहिरो गएर खेती योग्य जमीनसमेत काम नलाग्ने भई सक्दा पनि स्थानीय सरकार नदेखे जस्तो गरिरहेको छ । यस सम्बन्धमा वडा नं ११ का वडा अध्यक्षलाइ सम्पर्क गर्दा पहिलो कुरा राजस्व बुझाउँन आउँनेलाइ राजश्व नबुझ्ने भन्ने कुरै हुँदैन बछला देबीका सञ्चालकले राजश्व बुझाउनै नआएको र सो कुरा झुटो भएको बताए भने कानुन बिपरित कार्य गर्ने जो कोहीलाइ पनि कार्बाही गर्दा आफुले सहयोग गरेर सहजता गरिदिने समेत बताए ।

## संघीयता बिरोधीहरु भ्रम छर्न लागिपरेका छन् : मेयर खत्री



भक्तपुर । चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्रीले संघीयता बिरोधीहरु स्थानीय सरकारलाई बद्नाम गर्न लागिपरेका बताएका छन् । जनताको घर आगनमै रहेको सरकारमाथि अनावश्यक भ्रम छर्दै हिड्नेहरु व्यवस्था बिरोधी भएका उनको भनाइ छ । आइतबार राष्ट्रिय सञ्चार केन्द्रले आयोजना गरेको अन्तरक्रिया कार्यक्रममा बोल्दै नगरप्रमुख खत्रीले चाँगुनारायण नगरपालिकाले स्थापनाको छोटो अवधीमै उल्लेखनीय प्रगति गरेको दावी गरे । दर्जनौं उपलब्धि हासिल गरेपनि प्रचार हुन नसकेको उनको गुनासो छ ।

चाँगुनारायण वायुगुणस्तरको सुधारका लागि कार्यविधि नै बनाएर अघि बढ्ने पहिलो नगर रहेको उनले बताए। 'सरसफाइको तालिम दिने र वायुगुणस्तरको सुधार लागि कार्यविधि नै बनाएर अघि बढ्ने चाँगुनारायण नै देशैभरमा पहिलो हो ।', उनले भने ।

भौतिक पूर्वाधारको विकास सँगसँगै सामाजिक र मानवीय विकासलाई पनि प्राथमिकतामा राखेर अगाडि बढिरहेको नगर प्रमुख खत्रीले बताएका छन् । स्वास्थ्य र शिक्षालाई प्राथमिकता पूर्वक अघि बढाइरहेको उनले बताए । नगरपालिकाले आगामी वर्ष २०८२ लाई 'नगरकोट भ्रमण वर्ष २०८२' का रुपमा मनाउने तयारी गरिएको पनि बताएका छन् । त्यसका लागि धार्मिक, ऐतिहासिक र पर्यटकीय क्षेत्रको मर्मतसम्भार, स्तरोन्नतिका कार्यका लागि योजना बनाइरहेको नगर प्रमुख खत्री जानकारी दिए । सडक संजाल र यातायात सुविधाको व्यवस्थापन र संघीय सरकारको कार्यक्षेत्र अन्तर्गत रहेको नगरकोट-कमलविनायक सडकखण्ड समयमै मर्मत गर्न ताकेता भैरहेको उनको भनाइ छ ।

गत असोज ११ र १२ गतेको अविरल वर्षाका कारण चाँगुनारायण नगरपालिकामा मानवीय क्षति नभए पनि भौतिक क्षति धेरै भएको बताए । विपद व्यवस्थापनमा गरिएको पूर्वतयारीले यो पटक मानवीय क्षती रोक्न सफल भएको प्रमुख खत्रीले जिकिर गरे । पूर्वाधार निर्माणका लागि छुट्याइएको बजेटको १० प्रतिशत रकम कटाएर विपद् व्यवस्थापनका लागि कोषमा जम्मा गरिएको पनि उनले जानकारी दिए ।

अन्तरक्रियाका क्रममा नगरपालिकाका उपप्रमुख रमेश बुढाथोकीले आफ्नो नगरको भौगोलिक बनावटका कारण यातायातको समस्या रहेपनि त्यसको समाधानका लागि कार्यविधि नै बनाएर पास गराइएको जानकारी दिए । बस नचल्ने स्थानमा 'अटो' र दशैंको समयबाट ईभी गाडी चलाउन सुरु गरिएको उप प्रमुख बुढाथोकीले बताए ।

नगरपालिकाले सञ्चालन गरेको चाँगुनारायण नगर अस्पतालल्लाई शैया वृद्धि सहित स्तरोन्नति गरिएपनि सरकारबाट स्वीकृति नपाएको उनको गुनासो छ । नगरपालिकाले तोकिएका सबै मापदण्ड पुरा गर्दा पनि सरकारले नै स्वीकृति दिन ढिलाई गरिरहेका कारण स्थानीयको उपचारमा समस्या भएको उप प्रमुख बुढाथोकीले बताए ।

उपप्रमुख बुढाथोकीका अनुसार, एक घर एक धाराको नीति अनुसार सबै नगरबासीलाई आवश्यकता अनुसार पानीको वितरण गर्न बजेट विनियोजन गरिएको छ । नगरपालिकाले सञ्चालन गरिरहेको नेपाल इन्जिनियरिङ कलेज प्रति भने उनले असन्तुष्टि प्रकट गरेका छन् । "ख्वप: कलेजले ७ लाखमा इन्जिनियर बनाउदा हाम्रो कलेजले १२ लाख लिनु उचित होइन ।" उनले भने ।

हालैको बाढी पहिरोले 'डोजरे विकास' भएका क्षेत्रमा बढी क्षति भएको स्वीकार गर्दै उनले नगरपालिकाको स्वीकृति लिएर भएका कार्यहरुमा अवरोध गर्न नमिल्ने अवस्था रहेको अवगत गराए । मनलाग्दी जथाभावी तरिकाले डोजर लगाएको समाचारको आधारमा अघिल्लो वर्ष एकै व्यक्ति बाट रु ६० लाख सम्म जरिवाना गराइएको स्मरण गर्दै उनले समाचार र सूचनाका लागि सञ्चार जगतलाई धन्यवाद ज्ञापन गरे ।

कार्यक्रममा बोल्दै २ नं वडाका वडाध्यक्ष सोमप्रसाद प्रधानले शिक्षा क्षेत्रमा आफ्नो वडा अब्बल रहेको दावी गरे । हालैको एसईईको नतिजामा पनि नगरभरिमै सर्वोत्कृष्ट नतिजा ल्याउने विद्यार्थी आफ्नै वडाको सामुदायिक विद्यालयको रहेको उनले बताए । तर, सामुदायिक विद्यालय पढाउने शिक्षकले आफ्ना बालबालिकाहरु भने निजी विद्यालयमा पढाउँदा विश्वसनियतामाथि प्रश्न उठ्ने गरेको अध्यक्ष प्रधानको भनाइ छ । वडाबासीलाई घरघरमै स्वास्थ्य सेवा दिनका लागि 'वडाध्यक्ष जनता स्वास्थ् कार्यक्रम' लागू गराउने उनले जानकारी दिएका छन् ।

६ नं वडाका अध्यक्ष धन बहादुर लामाले हरेक आवश्यकता पुरा गर्ने प्रयास गरिएको दावी गर्दै वडाले आफ्नै क्यालेण्डर निर्माण गरेर त्यसै अनुसारका कार्यक्रम सञ्चालन गर्दै आएको बताए । पर्यटकको आकर्षणको केन्द्र मानिने नगरकोटमा सडकको दुरावस्था लगायतका कारण पर्यटकको आगमनमा कमी आएको लामाले बताए । भूकम्पका कारण थलिएको अर्थतन्त्र र त्यसपछिको कोरोना महामारीका कारणले भएको आर्थिक मन्दिका कारण पनि नगरकोटमा पर्यटक घट्दै गएको उनले बताए । नगरकोटलाई सूर्योदय, सूर्यास्त र हिमशृङ्खला अवलोकन गर्ने ठाउँका रुपमा मात्र नहेरी ऐतिहासिक र धार्मिक महत्वको स्थान भनेर 'रि-ब्राण्डिङ' गर्न आवश्यक रहेको वडाध्यक्ष लामाले बताए ।

कार्यक्रममा बोल्दै ७ नम्बर वडाका अध्यक्ष श्यामकृष्ण नायजु श्रेष्ठले आफूले अघिल्ला वडाध्यक्षका राम्रा कार्यहरुलाई निरन्तरता दिएको र आफूले बिकासमा कुनै बिभेद नगरी आवश्यकताका आधारमा योजनाहरु बनाएको बताए । ऐतिहासिक एवं धार्मिक क्षेत्रको संरक्षण, फल्चा निर्माण, मन्दिर पुनःनिर्माणका साथै पूर्वाधार विकास तथा स्थानीयको आयआर्जन वृद्धिमा आफू केन्द्रित रहेको उनले बताए ।

# मध्यपुर महोत्सव २०८१: क्षेत्रगत समितिहरु गठन




भक्तपुर । स्थानीय कला, संस्कृति र सम्पदाको प्रवर्द्धन गर्न यहि पुस १२, १३ र १४ गते मध्यपुर महोत्सब २०८१ आयोजना हुने भएको भएकोले सोको तयारीका लागि मध्यपुर थिमि नगरपालिकामा रहेको तत्कालिन दिव्यश्वरी, बालकुमारी, चपाचो, नगदेश र बोदे क्षेत्रका स्थानियहरुको सहभगितामा क्षेत्रगत समिति गठन भएको छ। चपाचो क्षेत्र अन्तर्गत मध्यपुर थिमि वडा न ६ का अध्यक्ष ज्ञानदास प्रजापतिको संयोकत्वमा समिति गठन गरिएको हो ।

मध्यपुर महोत्सव २०८१ लाई ऐतिहासिक रुपमा सफल बनाउनुका साथै मध्यपुर थिमि नगरपालिकामा रहेका कला, सँस्कृति, सम्पदा, परम्परागत पेशा तथा मौलिकता प्रदर्शनका लागि विभिन्न राजनैतिक दलका प्रतिनिधिहरु, बर्तमान तथा पुर्व जनप्रतिनिधिहरु तथा स्थानिय टोल प्रतिनिधिहरुलाई समितिमा समेटेको वडा अध्यक्ष प्रजापतिले जानकारी दिए ।

विश्व सम्पदा सूचिमा सूचिकृत सम्पदा भएका तीन ठुला नगरपालिकाहरुको बीचमा अवस्थित नगरपालिका अनि मूर्त, अमूर्त सम्पदाको धनी र छुट्टै पहिचान तथा मौलिकता बोकेको नगर भएता पनि पर्याप्त प्रवर्द्धनको अभावमा पर्यटकीय गन्तव्यको रुपमा विकास हुन नसकिरहेको अबस्थामा रोजगारी सिर्जना र आम्दानीको साधन बनाएर पर्यटन मार्फत नगरको अर्थतन्त्रलाई थप गतिशिल एवम् प्रगतिशित बनाई स्थानीय कला, संस्कृति र सम्पदाको प्रवर्द्धन गर्न कै लागि मध्यपुर महोत्सब २०८१ आयोजना हुन लागेको हो ।

यस्तै मध्यपुर थिमि नगरपालिका वडा नं.७ (तत्कालिन सिद्धि गणेश गाविस अन्तर्गतका क्षेत्र) का स्थानियहरुको स्थानिय बुद्ध बिहारमा भएको भेलाले २५ सदस्यीय क्षेत्रगत समिति गठन गरेको हो। मध्यपुर थिमि वडा न ७ का अध्यक्ष कृष्ण कुमार प्रजापतिको संयोकत्वमा समिति गठन गरिएको थियो ।

त्यस्तै बोदे र निलबाराही क्षेत्रमा रहेको तिगनीमा पनि क्षेत्रगत समिति गठन हुने जनाएको छ भने मध्यपुर थिमिको दिव्यश्वरी क्षेत्रलाई समेटेर पनि छिट्टै महोत्सवको लागि तयारी गर्न क्षेत्रगत समिति गठन हुने नगरपालिका स्रोतले जनाएको छ ।

त्यस्तै बालकुमारी क्षेत्र अन्तर्गत लायकुमा बसेको सरोकारवालाहरुको बैठकबाट महोत्सब तयारी क्षेत्रगत समिति गठन भएको जनाएको छ ।

# दाहालको कामलाई ओलीको १०० दिने उपलब्धि



काठमाडौं । तत्कालीन प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डकै पालामा कार्यान्वयनमा आएको 'विदेशी लगानी स्वीकृत गर्ने स्वचालित प्रणाली (अटोमेटिक रुट)' लाई प्रधानमन्त्री केपी शर्मा ओलीले आफ्नो कार्यकालमा सम्पन्न भएको दाबी गर्दै १०० दिने उपलब्धिको सूचीमा समेटेका छन् । उक्त अटोमेटिक रुट गत वैशाखमा आयोजना भएको तेस्रो लगानी सम्मेलनको अवसरमा उद्योग विभागले कार्यान्वयन गरेको थियो । त्यतिबेला प्रधानमन्त्री दाहाल थिए भने उद्योगमन्त्री दामोदर भण्डारी। तेस्रो लगानी सम्मेलनबाटै कुल पूँजी ५० करोड रुपैयाँसम्मको विदेशी लगानी स्वचालित प्रणाली (अटोमेटिक रुट) बाट स्वीकृत गर्ने लागू भइसकेको छ ।

तर गत बुधबार प्रधानमन्त्री ओलीले सार्वजनिक गरेको सय दिने उपलब्धिमा पनि कुल पुँजी ५० करोड रुपैयाँसम्मको विदेशी लगानी स्वचालित प्रणालीबाट तुरुन्त स्वीकृतिको प्रमाणपत्र प्राप्त गर्न सक्ने गरी उद्योग विभागमा स्वचालित मार्ग कार्यान्वयनमा आएको उल्लेख छ ।

गत वैशाखमा भएको तेस्रो लगानी सम्मेलनको अवसरमा उद्योग विभागले अटोमेटिक रुटमार्फत विदेशी लगानी स्वीकृत हुने प्रणाली कार्यान्वयनमा ल्याएको थियो । जबकि कांग्रेस, एमाले गठबन्धनको प्रधानमन्त्री ओली गत असार ३१ मा मात्रै नियुक्त भएका हुन् । उनले अघिल्लै सरकारले सम्पन्न गरेको कामलाई आफ्नो उपलब्धि भनी सिंहदरबारबाट घोषणा गरेका हुन् ।

'लगानीकर्ताको भौतिक उपस्थित बिना कुल पुँजी ५० करोड रुपैयाँसम्मको विदेशी लगानी स्वचालित प्रणालीबाट तुरुन्त स्वीकृतिको प्रमाणपत्र प्राप्त गर्न सक्ने गरी उद्योग विभागमा स्वचालित मार्ग कार्यान्वयनमा आएको,' ओलीले सरकारको बुधबार सार्वजनिक सय दिने उपलब्धि सूचीमा उल्लेख छ । सरकारले सय दिनको उपलब्धिमा दुई सय वटा उद्योगमा करिब ३४ अर्ब रुपैयाँ लगानीको प्रतिबद्धता आएको पनि ओलीले दाबी गरेका छन् । अन्तर्राष्ट्रिय स्वतन्त्र विज्ञ संस्थाबाट नेपालको सार्वभौम साख मूल्याङ्कन (क्रेडिट रेटिब) को कार्य अन्तिम चरणमा पुगेको समेत उनले जनाएका छन् । लामो समयदेखि गिरेको सेयर बजार प्राकृतिक विपत्तिको प्रतिकूलताका बीचमा पनि प्रगतिकै लयमा रहेको सरकारको उपलब्धि सूचीमा समावेश छ ।

यसैगरी दाहाल नेतृत्वको सरकारको पालामा सुरु भएको कीर्तिपुर क्रिकेट मैदानमा फ्लड लाइट जडान र प्याराफिट निर्माणको काम आफैंले सुरु गरेको सुनाएका छन् । 'क्रिकेट मैदान भएको तर आवश्यक पूर्वाधार नभएको गुनासोलाई सम्बोधन गर्न सरकार गठन भएलगत्तै हामीले तीन सय दिनभित्र कीर्तिपुरको क्रिकेट मैदानमा फ्लड लाइट जोड्ने, स्कोर बोर्ड राख्ने र राति पनि खेल्न मिल्नेगरी रङ्गशाला बनाउने निर्णय गरेका थियौँ,' उनले भने, 'कीर्तिपुर क्रिकेट रंगशालामा फ्लड लाइट जडान र प्याराफिट निर्माण गर्न सहरी विकास मन्त्रालय र राष्ट्रिय खेलकुद परिषद्बीच समझदारी भई काम सुरु भएको छ ।'

तर, कीर्तिपुर क्रिकेट मैदानमा फ्लड लाइट जडान गर्न २०८० कात्तिक तेस्रो साता नै २७ करोड ४० लाख रुपैयाँको ठेक्का सम्झौता गरिएको थियो। फ्लड लाइट जडानका लागि सिनामंगलको एमएसआइपीएल-एएसपी पावर जेभीले ठेक्का पाएको थियो। उक्त सम्झौता अनुसार काम अघि बढाउन तत्कालीन प्रधानमन्त्री दाहालले चैत पहिलो साता निर्देशनसमेत दिएका थिए ।

दाहाल नेतृत्वकै सरकारले नीति तथा कार्यक्रममा पनि कीर्तिपुरलगायतका क्रिकेट मैदानमा फ्लड लाइट जोड्नेलगायतका स्तरोन्नतिका कार्य गर्ने योजना अघि सारेको थियो । ओली सरकारको पहिलो निर्णय पनि त्रिवि क्रिकेट मैदानमा फ्लड लाइट जोड्ने थियो। उक्त निर्णयमा भनिएको थियो, 'कीर्तिपुर क्रिकेट मैदानमा अन्तर ाष्ट्रिय मान्यताअनुरुप फ्लड लाइट जडान र प्याराफिट निर्माण कार्य ३०० दिनभित्र सम्पन्न गर्ने ।'

## मध्यपुर पतञ्जलीद्वारा योग संयोजकहरु सम्मानित

मध्यपुर थिमि । मध्यपुर योग समिति मध्यपुर थिमिद्वारा मध्यपुर थिमि नगरक्षेत्रभित्र सञ्चालित योगकेन्द्रका वर्तमान संयोजक एवं संस्थापक संयोजकहरुलाई सम्मान गरिएको छ ।

पतञ्जली योगसमिति अन्तर्गतको मध्यपुर योग समितिका अध्यक्ष तुल्सीकृष्ण श्रेष्ठको सभपातित्वमा भएको कार्यक्रमको उद्घाटन पतञ्जली योग समिति बागमती प्रदेशका प्रभारी योगगुरु ग्रोवेन तौजलेले गरेको थियो ।

कार्यक्रममा पतञ्जली योग समिति भक्तपुरका अध्यक्ष नित्यनाथ श्रेष्ठ, पूर्व अध्यक्ष केदार खड्का, भक्तपुर युवा प्रभारीका विकास बज्राचार्य, योगगुरुहरु राजभक्त जयना, हरिसुन्दर लाखे श्रेष्ठ, महिला पतञ्जली भक्तपुरकी अध्यक्ष सुनिता श्रेष्ठ, पतञ्जली योगसमिति मध्यपुर थिमिका राजन गिरी, सकुन श्रेष्ठ लगायतका वक्ताहरुले योगको महत्व सहित शुभ दिपावली, नेपाल सम्वत् ११४५ नयाँवर्ष, छठ लगायतका चाडहरुको शुभकामना दिएको थियो । शंखधर बैंक्वेटमा भएको उक्त सम्मान एवं शुभकामना आदानप्रदान कार्यक्रमको संयोजन बालकुमारी योग केन्द्रले गरेको थियो । उक्त सम्मान कार्यक्रममा पतञ्जली योगसमिति मध्यपुर थिमिका निवर्तमान अध्यक्ष सुनकुमार मोयलाई विशेष सम्मान गरिएको थियो । पतञ्जली योग समिति अन्तर्गत मध्यपुर थिमिमा १७ वटा योगकेन्द्र रहेका छन् । मध्यपुर थिमिको पहिलो योग केन्द्र मध्यपुर थिमि योगकेन्द्र वि.सं.२०६६ भदौमा स्थापना भएको थियो । पतञ्जली योगसमिति मध्यपुर नगरका अध्यक्ष तुल्सीकृष्ण श्रेष्ठले नियमित योगसाधना मार्फत शारीरिक, मानसिक, स्वास्थ्यका साथै व्यक्तित्व र नेतृत्व विकास एवं सामाजिकीकरणमा फाइदा हुने बताउँदै मध्यपुर थिमिमा योगमार्फत विभिन्न सामाजिक कार्यहरु पनि गर्दै जाने जानकारी दिए ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### हार्दिक मङ्गलमय शुभकामना !!

नेपालीहरुको महान पर्व दशैं सकिए लगतै अर्को पर्व स्वन्ती नखः, तिहार, दीपावली तथा तराईवासीको पर्व छठ र नेपालको मौलिक संवत्को रुपमा रहेको नेपाल संवत् ११४४ लक्ष्मी पुजासँगै अन्त्य भएर नयाँ वर्ष ११४५ शुरु हुने क्रममा रहेको छ। तर नेपालीहरुको मौलिक पर्वको रुपमा रहेका यी विभिन्न नाममा मानिने पर्वहरु देशमा रहेका विभिन्न जनजातिहरुले एकै समय मान्ने गरेको कारण सबै नेपालीहरुको साझा पर्वको रुपमा रहेको छ।

यो नैं देशको मौलिक पहिचान पनि हो। देशमा रहेका यस प्रकारको विभिन्न जनजाति समुदायका मौलिक पहिचानबाट नै देशको पहिचान स्थापित हुने कुरामा बिमति कसैको नहोला। किनकी यो सानो मुलुक भएर पनि पनि यहाँको विविधता फरक फरक रहेको र बहुल जात, भाषा, धर्म र संस्कृति रहेको नेपालको संविधानबाट नै नेपालको पहिचान स्थापित भइसकेको अवस्था छ।

तर विडम्वना मान्नु पर्दछ। यी चाड पर्व मनाउने सन्दर्भमा विभिन्न प्रकारका अवरोध खडा गर्दै तिथिमितिमा अल्मलाएर नेपालीहरुले मनाउने चाडपर्वमा विभेद ल्याएर नेपालीहरु माझ नै समुदाय बिच द्वन्द गराउने कार्य भइरहको छ। यो नेपालको मौलिक पर्व माथिको विचलन ल्याउने कार्य हो। अहिले सर्वसाधारणहरु पर्व मनाउने सवालमा फरक फरक दिनमा पर्व मान्नु पर्ने तर्क वितर्क गर्दै नेपालीको मौलिक पर्वलाई समुदाय विच फरक शैली र दिनमा मनाउन उक्साउने गरेको छ। यसरी एकै समय विभिन्न नामबाट मनाइने साझा पर्वलाई समुदाय बिशेषको नाममा फुट ल्याउने कार्यले नेपालको यी मौलिक पर्व माथिको प्रहारबाट आउने दिनमा सांस्कृतिक विचलन आउने सांस्कृतिक बिश्लेषकहरुको बिश्लेषण रहेको छ।

साथै नेपालमा रहेको पर्व चाडको निर्क्योल गर्ने निकाय पञ्चाङ निर्णायक समितिले पनि देशमा मनाइने यी पर्वहरुको बारेमा एकरुपता ल्याउनको सट्टा विभेद ल्याउने कार्य गरेको आरोप लाग्दै आएको छ, भने समुदायका अगुवा भनिने व्यक्तिहरुले पनि देशमा मनाइने पर्वहरुमा एक रुपता ल्याएर देशको मौलिक सांस्कृतिक स्वरुपको जगेर्ना गर्नुको साटो फुटाउने कार्य गरेको आम जनमिुदायको धारणा रहेको छ।

देशमा मनाइने हरेक चाड पर्व देशका गहना हुन्। साथै ती देशको सांस्कृतिक पहिचानको आधार पनि हुन तर यसरी ती चाडपर्वहरुको मौलिक स्वरुपमा प्रहार गर्दै देशकै पहिचान माथि प्रहार गरिनु भोलिका दिनमा देशका यी मौलिक सांस्कृतिक पहिचान मेटाउने कार्य हो। यस विषयमा हरेक नेपालीले एक पटक सोच्नै पर्ने भएको छ। सामान्यतया हरेक चाडपर्व, जात्रा, सांस्कृतिक महोत्सवहरु मनाइने निश्चित विधि, प्रक्रिया र दिन निर्धारण गरिएका हुन्छन्। सो अनुरुप सरोकारवाला व्यक्ति संस्था र राज्यले पनि देशमा मनाइने सांस्कृतिक महत्वको चाडपर्वहरु जुन देशकै मौलिक पहिचानसँग जोडिएका हुन्छन्, त्यसमा एकरुपता ल्याउन आवश्यक पहल हुनु आवश्यक छ। यसमा स्थानीय सरकार देखि प्रदेश, संघीय सरकार र सरोकावाला निकायले पनि संविधान प्रदत्त मोलिक पहिचान स्थापित गर्न समयमै ठोस कदम चाल्नु आवश्यक छ।

साथै नेपालीहरुको साझा पर्वको रुपमा रहेको नेपाल संवत् ११४५ न्हूँ दँ, स्वन्ती नखः, उज्यालोको पर्व दीपावली, तिहार तथा यम पञ्चक पर्वको शुभ उपलक्ष्यमा सम्पूर्ण ग्राहक, विज्ञापनदाता, पाठक, शुभचिन्तक एवं देश विदेशमा रहनु हुने सम्पूर्ण नेपाली दाजुभाई दिदीबहिनीहरुमा हार्दिक मङ्गलमय शुभकामना व्यक्त गर्दछौं।

# नेता, कर्मचारी र व्यापारी देश लुट्ने, जनता विदेशमा बसेर उफ्रिने !

● रुषा थापा

हाम्रो समाजमा 'ठूलालाई चैन, सानालाई ऐन' भन्ने गरिएको छ। २०६६ जेठ ११ गते माधवकुमार नेपाल प्रधानमन्त्री बने। बालुवाटारस्थित ललिता निवासको सरकारी जग्गा व्यक्तिको नाममा पास गरिदिने निर्णय उनकै मन्त्रिपरिषद्ले गरेको थियो। कालोपुल र काभ्रेको रोपनीका रोपनी जग्गा व्यक्ति तथा व्यवसायीलाई दिने पनि निर्णय गरियो।

त्यस्तै, बाबुराम भट्टराई ०६८ भदौ १२ गते प्रधानमन्त्री भए। उनले पनि ललिता निवासको सरकारी जग्ग व्यक्तिको नाममा पास गरिदिने निर्णय गरे। योसँगै थानकोट र मातातीर्थको रोपनीका रोपनी सरकारी जग्गा व्यक्तिको नाममा पास गरिदिने निर्णय गरे।

प्रधानमन्त्री केपीशर्मा ओलीले पनि ०७८ वैशाख ७ र १३ गते मन्त्रिपरिषद् बैठकमार्फत झापाको गिरिबन्धु टि स्टेटको सरकारी जग्गा व्यक्तिको नाममा पास गरिदिने निर्णय गराए। यी तीनै जना अहिले पनि राजनीतिमा सकिय छन्। वर्तमान सरकारमा ओली नै प्रधानमन्त्री छन्।

स्वर्गीय भइसकेका कृष्णप्रसाद भट्टराई, सूर्यबहादुर थापा, मनमोहन अधिकारी र गिरिजाप्रसाद कोइरालाले पनि आफु प्रधानमन्त्री हुँदा सरकारी तथा गुठीका जग्गा व्यक्तिको नाममा पास गरिदिने निर्णय गरेका थिए। नक्सालस्थित बाल मन्दिरको सरकारी जग्गा पनि व्यक्तिको नाममा दर्ता गराइयो।

ललिता निवासको सरकारी जग्गा दर्ता गराउने वा गर्ने व्यक्तिहरुलाई अझै पनि सरकारले समात्न सकेको छैन। जबकी अदालतले उनीहरुलाई दोषी ठहर गर्दै कैद र सजाय नै सुनाइसकेको छ। नक्कली भुटानी शरणार्थी प्रकरणमा काँग्रेस नेतृ एवं परराष्ट्रमन्त्री डा.आरजु राणा देउवा पनि पकाउ परेकी छैनन्।

सहकारी ठगीको आरोप लागेका माओवादी नेता शक्तिबहादुर बस्नेत र रास्वपा नेता डिपी अर्याललाई पनि प्रहरीले समात्न सकेको छैन। काँग्रेस नेता धनराज गुरुङ र एमाले नेता ऋषिकेश पोखरेलमाथि पनि सहकारी ठगीको अभियोग छ। यद्यपि, उनीहरु समातिन सकेका छैनन्। राप्रपा नेतृ गीता बस्नेतविरुद्ध त सहकारी ठगीमा पकाउ पुर्जी नै जारी भइसक्यो।

तैपनि उनी पकाउ परेकी छैनन्। राजनीतिक दलका उच्च पदस्थमा रहेका यी व्यक्तित्वलाई गृहमन्त्री रमेश लेखकले पकाउ गर्न हालसम्म प्रहरीलाई निर्देशन दिएका छैनन्। काँग्रेस नेता गगन थापा स्वास्थ्यमन्त्री हुँदा अर्बौं भ्रष्टाचार गरेको आरोप छ। बाखा पाल्ने नाममा जनताले तिरेको करोडौं रकम झवाम बनाएको बताइन्छ।

यद्यपि, उनीमाथि पनि अनुसन्धान भएको छैन। एमाले नेता महेश बस्नेतको खर्बौंको सम्पत्ति रहेको सुनिन्छ। मन्त्री वा सांसद हुँदा उनले भ्रष्टाचार गरेर अंकुत सम्पत्ति जोडेको आरोप छ। त्यस्तै, काँग्रेस, माओवादीलगायत राजनीतिक दलका नेतासँग अंकुत सम्पत्ति रहेको बताइन्छ।

अहिले जुनसुकै पार्टीका नेताहरुको सम्पत्ति छानबिन गरेमा सबै भ्रष्टाचारमा पर्ने छन्। किनकि यीनीहरुले आफ्नो दश पुस्तालाई पुग्ने सम्पत्ति आयआर्जन गरिरहेका छन्। फेरि त्यसको स्रोत भने खुलाउन सक्दैनन्। केही दिनअघि माओवादीले सरकारको खबरदारी गर्यो। सो पार्टीका अधयक्ष पुष्पकमल दाहाल प्रचण्डको हातमा ७८ लाख पर्ने घडी छ।

अनि आफैं भ्रष्टाचारी भएको व्यक्तिले अरुको खबरदारी गरेको सुहाउँछ ? राप्रपा अध्यक्ष राजेन्द्र लिङ्देन भ्रष्टाचार गर्नु आमाको रगत खानुसरह हो भन्छन्। तर, अहिले उनको सम्पत्ति छानबिन गरेमा उनी पनि एक नम्बरमै आउने छन्। चित्रबहादुर केसी र प्रेम सुवाल पनि आफ्नो सम्पत्ति सार्वजनिक गर्दैनन्।

जसका कारण उनीहरु पनि भ्रष्टाचारी नै रहेको जनता बताउँछन्। देश र जनताको गीत गाएर र राजनीतिक दलको खोल ओढेर नेताहरुले देश नै बेचिसकेका छन्। जनताले तिरेको करमा मोजमस्ती गरिरहेका छन्। सरकारी कर्मचारी त झनै भ्रष्टाचारी भइहाले। कसरी भ्रष्टाचार गर्ने वा घुस खाने भन्ने मात्र उनीहरुको मतलबको विषय हो।

हामी कहाँ सरकारी कर्मचारीलाई राष्ट्रसेवक भनिने गरिएको छ। तर, कर्मचारी देश र जनताका लागि विषालु सर्प बनेका छन्। अहिले बहालवाला होस् या पेन्सनवाला कर्मचारी भन्छन्, 'नेताले देश बिगारे।' आफु घुस खाने, भ्रष्टाचार गर्ने अनि दोष चाँहि नेतालाई मात्र लगाउने ! देश बिगार्नुमा कर्मचारी र नेता दुवैको बराबरी हात छ।

नेताहरु अहिले पनि हामी देश बनाउँछौं भनेर जनतालाई भ्रममा पारिरहेका छन्। तर, देश नै नरहेपछि कुन देश बनाउँछन् कुन्नि ! देशै धितो राखेर विदेशीसँग २७ खर्ब ऋण लिइसके। अझै लिने क्रम जारी छ। अहिले सरकार एउटासँग ऋण लिएर अर्काको साँबाब्याज तिरिरहेको छ। तर, कतिञ्जेल यस्तो चल्छ ? विदेशीले ऋण दिन छोड्नासाथ देश तहसनहस हुने छ।

अहिले ऋण दिएका देशहरु नै नेपाल आफ्नो स्वामित्वमा राख्न हानाथाप गर्ने छन्। अब त कसैले हामीलाई हाम्रो राष्ट्रियता सोधेमा नेपाली समेत भन्न नसकिने अवस्था निम्तिएको छ। सयौं वर्षअघि मुलुकको भूभाग धेरै थियो। तर, भारत र चीनले नेपालको अधिकांश भूभाग कब्जा गर्यो। बाँकी भएको भूभाग पनि सरकारी कर्मचारी र नेता मिलेर बेचिसके।

अहिले अमेरिका, अस्ट्रेलिया, क्यानडालगायत विकसित मुलुकमा रहेका नेपाली सामाजिक सञ्जालमार्फत नेपालमा विकास नभएको गुनासो गर्छन्। आफु प्लस टु पढ्नेबित्तिकै विदेश पलायन हुने अनि त्यता बसेर मातृभूमिलाई गालीगलौज गर्ने ! यदि उनीहरु साँच्चिकै नेपाली भएको भए आफ्नै देशमा बस्थे।

आफ्नो देशमा ठुलोसानो रोजगारी गर्थे। राज्यलाई कर तिर्थे। भ्रष्टाचार व्यापक भएमा भ्रष्टाचार विरोधी अभियान चलाउँथे। तर, आफ्नो कर्तव्य र दायित्व पुरा नगर्ने अनि अधिकार मात्र खोजेर हुन्छ ! जनतालाई विकसित मुलुक जान पाए पुग्ने अनि कर्मचारी र नेतालाई भ्रष्टाचार, मोजमस्ती गर्न पाए पुग्ने। यति भएपछि देश कसरी विकास हुन्छ ?

मुलुकमा राजनीतिक परिवर्तनका निम्ति विभिन्न मितिमा धेरै चोटी आन्दोलन भयो। जनताको बलमा राजनीतिक परिवर्तन भयो। राजनीतिक परिवर्तन त भयो तर देश झनै खोक्रो भयो। कर्मचारी र नेताले भ्रष्टाचार गरे अनि व्यापारीले राजस्व छले। नेता, कर्मचारी र व्यापारीले मिलेर देश टाट पल्टाइसकेका छन्।

मुलुकको अर्थतन्त्र धरायसी अवस्थामा पुगिसक्यो। सरकारी तथ्यांकअनुसार नै राजस्व उठ्न छोडेको छ भने खर्च दिनानु दिन बढ्दो छ। मुलुकमा उद्योग, कलकारखाना केही पनि छैन। राज्यसँग राजस्व उठाउने स्रोत नै छैन। जनताको लगानी घरजग्गा र गाडीमा मात्र छ। यसमा करोडदेखि अर्बसम्म लगानी गरिएको छ।

यद्यपि, यसको राजस्व राज्यले पाएको छैन। राज्यको ढुकुटी रित्तिदैं गएको छ। नेताहरु अहिले पनि हामी देश विकास गर्छौं भन्छौं। यसलाई कसरी लिने ? जनताले देश खाँको भएको नबुझेको कि नेताले जनतालाई उल्लु सोचेको ? भक्तपुर

## कमेरोटार जग्गा एकीकरण आयोजना

मध्यपुर थिमि, भक्तपुर

### विकसित घडेरी विक्रीको सिलवन्दी बोलपत्र आव्हान सम्वन्धी सूचना

(प्रथम पटक प्रकाशित मिति २०८१/०७/१३)

फोनः ०१-५०९३११५

यस जग्गा एकीकरण आयोजनाको आयोजना व्यवस्थापन उप-समितिको मिति २०७९/११/१५ को बैठकको निर्णयानुसार तपसिल बमोजिमका विकसित घडेरीहरु (प्लट) गोप्य सिलवन्दी बोलपत्रद्वारा बढाबढ गरी बिक्री गरिने भएको हुँदा इच्छुक नेपाली नागरिकहरुले आफूले खरीद गर्न चाहेको प्लटको जम्मा मूल्य अंक र अक्षर दुवैमा प्रष्ट उल्लेख गरी नागरिकताको प्रतिलिपी सहित यो सूचना प्रकाशित भएको मितिले ३० दिन भित्र कार्यालय समयमा बोलपत्र फाराम खरिद गरी ३१ औं दिन दिनको १२:०० बजे भित्र गोप्य सिलवन्दी बोलपत्र पेश गर्नु हुन यो सूचना गरिएको छ।

१. खरीद गर्न चाहेको प्लटको आफूले कबोल गरेको कूल अंकको १०% प्रतिशतले हुन आउने रकम नेपाल बैंक लिमिटेड, थिमि शाखामा रहेको धरौती खाता नं. २३३००१००६१५५४१००००४ मा जम्मा गरेको सक्कल बैंक भौचर संलग्न गर्नु पर्नेछ।
२. प्राप्त सिलबन्दी बोलपत्रहरु ३१ औं दिन दिनको २:०० बजे निवेदनकर्ता वा निजका अधिकार प्राप्त प्रतिनिधिको उपस्थितीमा खोलिनेछ। उक्त समयमा सिलवन्दी बोलपत्र पेश गर्ने व्यक्ति वा निजको प्रतिनिधी उपस्थित नभएपनि बोलपत्र खोल्न वाधा पुग्ने छैन। सिलवन्दी बोलपत्र खरिद गर्ने र पेश गर्ने अन्तिम दिन विदा परेमा सो विदा पछिको कार्यालय खोलिएको दिनमा उपरोक्त बमोजिम हुनेछ।
३. विकसित घडेरी (प्लट) खरीदको लागि छनौट भएका व्यक्तिहरुले बाँकी ९०% रकम बोलपत्र स्वीकृत भै सो को सूचना आयोजनाको सूचना पाटीमा टाँस भएको मितिले १५ (पन्ध्र) दिनभित्र रकम जम्मा गरि सक्नु पर्नेछ। अन्यथा प्लट दावी गर्न पाईने छैन।
४. घडेरी जग्गा खरीद गर्ने सिलवन्दी बोलपत्र फाराम देहाय बमोजिमको रकम **(फिर्ता नहुने गरी)** नगद तिरी यस आयोजना कार्यालयबाट खरीद गर्न सकिनेछ।
५. अंक र अक्षर फरक परेमा अक्षरलाई मान्यता दिइनेछ।
६. रकम जम्मा गरेको सक्कल बैंक भौचरको पछाडि सिलवन्दी बोलपत्र दाताको नाम, थर, (तीन पुस्ते) ठेगाना र फोन नं. उल्लेख गर्नु पर्नेछ।
७. सिलवन्दी बोलपत्र स्वीकृत नहुने व्यक्तिहरुको धरौटी रकम A/C Payee चेकद्वारा फिर्ता गरिनेछ।
८. अन्य कुरा बुझ्नु परेमा ०१-५०९३११५ मा कार्यालय समय भित्र सम्पर्क राख्न सकिनेछ।
९. अन्य कुरा नेपालको प्रचलित ऐन नियम अनुसार हुनेछ।
१०. रित नपुगेको र म्याद नाघी आएको निवेदन उपर कारवाही हुने छैन।
११. प्राप्त सिलवन्दी बोलपत्रहरु स्वीकृत गर्ने नगर्ने सम्पूर्ण अधिकार यस कार्यालयमा सुरक्षित हुनेछ।
१२. खरिद कर्ता आफैले रजिष्ट्रेशन दस्तुर, राजश्व व्यहोर्नु पर्नेछ।

| सि. नं | सिट.नं/ वडा नं. | कि. नं. | क्षेत्रफल | | वाटोको चौडा मी. | मोहोडा मी. | | प्लटको न्यूनतम मूल्य रु. | | बोलपत्र फारामको दस्तुर रु. |
|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | व.मी. | रोपनी | | मी. | तर्फ | प्रति आना | प्लटको मूल्य रु. | |
| सेक्टर १ | | | | | | | | | | |
| 1 | 102-1191-22/11 | 25 | 137.60 | 0-4-1-1.2 | 7.5 | 15.64 | उत्तर | 5000000.00 | 21637771.75 | 3000.00 |
| 2 | 102-1191-21/12 | 137 मध्ये पश्चिमतर्फ | 148.10 | 0-4-2-2.5 | 7.5 | 7.9 | उत्तर | 5500000.00 | 25617800.84 | 3000.00 |
| 3 | 102-1191-23/9 | 49 | 58.85 | 0-1-3-1.61 | | | | | | |
| | 102-1191-23/11 | 3 | 22.73 | 0-0-2-3.43 | | | | | | |
| | | | 81.58 | 0-2-2-1.05 | 4 | 5.61 (Arc length 7.24) | उत्तर | 4000000.00 | 10262845.46 | 3000.00 |
| सेक्टर २ | | | | | | | | | | |
| 4 | 102-1190-20/12 | 94 | 143.37 | 0-4-2-0.14 | 7.5 | 9.86 | पूर्व | 4500000.00 | 20290600.31 | 3000.00 |
| 5 | 102-1191-11/9 | 52 | 98.78 | 0-3-0-1.71 | 11 | 9.32 | उत्तर | 5500000.00 | 17086606.12 | 3000.00 |
| सेक्टर ३ | | | | | | | | | | |
| 6 | 102-1191-12/10 | 155 | 82.04 | 0-2-2-1.3 | | | | | | |
| | 102-1191-12/10 | 264 | 160.09 | 0-5-0-0.6 | | | | | | |
| | | | 242.13 | 0-7-2-1.8 | 7.5 | 7.24 | उत्तर | 3700000.00 | 28175681.09 | 3000.00 |
| 7 | 102-1191-12/10 | 85 | 154.10 | 0-4-3-1.54 | 20 | 11.70 | उत्तर | 5500000.00 | 26655659.07 | 3000.00 |
| 8 | 102-1191-12/10 | 321 | 264.96 | 0-8-1-1.33 | 7.5*4 | 16.86* 20.41 | उत्तर/पूर्व | 4000000.00 | 33332232.57 | 3000.00 |
| सेक्टर ५ | | | | | | | | | | |
| 9 | 102-1190-15/9 | 78 | 118.64 | 0-3-2-3.7 | 11 | 6.24 | उत्तर | 5500000.00 | 20521916.89 | 3000.00 |

निमित्त आयोजना प्रमुख

# मानिसले जस्तै सोच्न सक्छ एआईले ?



-डा. परशुराम दाहाल

काठमाडौँ। कृत्रिम बुद्धिमत्ता (एआई) भनेको कम्प्युटरले मानिसजस्तै सोच्न र काम गर्न सिकेको प्रविधि हो। यसले जटिल समस्या समाधान गर्न र दैनिक जीवनका कामहरू सजिलै गर्न मानिसलाई सहयोग पु्र्याउँछ।

उदाहरणका लागि, फोनमा 'सिरी' वा 'गुगल असिस्टेन्ट' लाई प्रश्न गर्दा तुरुन्तै सही उत्तर दिन्छ, जसले समय बचाउँछ र काम सरल बनाउँछ। एआई प्रणालीहरूले तस्बिरहरू पनि चिन्न सक्छन्, जस्तै गुगल फोटोजले फोटोमा भएका साथीहरूलाई पहिचान गर्न सक्छ। स्वचालित गाडीहरू बिना ड्राइभर आफैं बाटो फेला पारेर सुरक्षित रूपमा चल्न सक्छन्।

त्यस्तै, नेटफ्लिक्सले हाम्रा हेर्ने बानीअनुसार फिल्म र शोहरू सिफारिस गर्छ, जसले हाम्रो मनोरञ्जन अनुभवलाई अझ रमाइलो बनाउँछ। एआईमार्फत अनलाइन पसलहरूले पनि तपाईंले खोजेका वा मन पराएका सामानहरू सुझाव गर्छन्, जस्तै अमेजनले नयाँ सामान सिफारिस गर्छ। बैंकिङमा एआईले ठगी पत्ता लगाउन मद्दत गर्छ र ग्राहकका प्रश्नहरू तुरुन्तै समाधान गर्न च्याटबोटहरू प्रयोग गरिन्छ। यस्ता सुविधाहरूले हाम्रो जीवनलाई सहज बनाउँछन्, तर यसको सही र सुरक्षित प्रयोगमा ध्यान दिन जरुरी छ।

एआई र मानिसबीचको तुलना गर्दा दुवैको सिकाइमा केही समानता भए पनि गहिरो भिन्नता छन्। मानिसले आफ्ना अनुभव, भावना, र सामाजिक अन्तरक्रियाबाट ज्ञान आर्जन गर्छ। जबकि एआई जस्ता प्रणालीहरूले गणितीय मोडेल र डाटाको आधारमा सिक्छन्। उदाहरणका लागि, बच्चाले बारम्बार अभ्यास गरेर हिँड्न सिक्छ र त्यो प्रयास उसको अनुभवको हिस्सामा रहन्छ। तर, एआईले उपलब्ध डाटाको विश्लेषण गरेर मात्र त्यसको पहिचान गर्छ र त्यसैको आधारमा उत्तर तयार गर्छ। च्याट जिपिटी जस्ता ठूला भाषा मोडेलहरूले पुस्तक, लेख र वेबसाइटहरूमा आधारित सामग्रीबाट ज्ञान सिक्छन्।

मानिस र एआई दुवै पृष्ठपोषण (फिडब्याक) र अनुकूलनको माध्यमबाट सिक्दै जान्छन्। विद्यार्थीले शिक्षकबाट पाएको फिडब्याकअनुसार गल्तीहरू सुधार गरेर अर्को परीक्षामा राम्रो गर्ने प्रयास गर्छ। फुटबल खेलाडीले खेलका क्रममा गल्ती गरेपछि कोचको निर्देशनअनुसार आफ्नो खेल सुधार्छ। यस्तै, एआईले पनि प्रयोगकर्ताबाट प्राप्त फिडब्याकको आधारमा आफ्ना जवाफहरू सुधार्छ र नयाँ चुनौतीहरू सामना गर्न अनुकूल हुन्छ। उदाहरणका लागि, च्याट जिपिटीलाई गलत उत्तर दिएर सच्याउँदा, त्यसले फाइन-ट्यूनिङमार्फत आगामी संवादमा ठीक जवाफ दिन प्रयास गर्छ।

तर, एआई र मानिसबीचको महत्वपूर्ण भिन्नता भनेको भावनात्मक बुझाइको अभाव हो। मानिसहरूले दु:खद् अनुभव र संवेदनशील घटनाबाट शिक्षा लिन्छन्। उदाहरणका लागि, बच्चाले तातो स्टोभ छोएर हात जलाउँछ भने ऊ त्यसबाट सिक्छ र भविष्यमा त्यस्तो गल्ती नगर्न सचेत हुन्छ। बजारमा महँगोमा सामान किनेर घाटा ब्यहोरेपछि व्यक्ति सौदाबाजी (बार्गेनिङ) गर्ने कला सिक्छ र अर्को पटक सस्तोमा किन्न प्रयास गर्छ तर एआईले यस्तो भावनात्मक वा सामाजिक सन्दर्भहरू बुझ्न सक्दैन।

हालको प्रविधिमा एआई लाई मानिस सरह भावनात्मक बुझाइ दिन निकै जटिल चुनौती हो। मानिसको भावना र बुझाइ अनुभव, जैविक प्रक्रिया, र सामाजिक अन्तरक्रियामा आधारित हुन्छ, जुन अहिलेको एआई मा छैन। यद्यपि, वैज्ञानिकहरू र इन्जिनियरहरू 'आर्टिफिसिएल इमोशनल इन्टिलिजेन्स' मा काम गरिरहेका छन्, जसले एआईलाई भावनाहरू अनुकरण गर्न र सामाजिक सन्दर्भहरू बुझ्न सक्षम बनाउन खोज्दैछ। तर, पूर्ण रूपमा मानिसको जस्तै सचेतना र भावना विकास गर्नु गाह्रो छ, किनकी मानिसको भावना केवल तथ्य र नियमहरूमा आधारित हुँदैन, बरु स्मृति, अनुभव, र समाजसँगको अन्तरक्रियाको परिणाम हो।

एआईमा कुनै सचेत अनुभव वा आत्मचेतना हुँदैन, किनकी यसको निर्णयहरू पूर्ण रूपमा तथ्य र गणनामा आधारित हुन्छन्। उदाहरणका लागि, जब मानिस दु:खी हुन्छ, उसको व्यवहारमा परिवर्तन आउँछ र त्यो परिवर्तन अनुभव र सन्दर्भसँग गहिरो रूपमा सम्बन्धित हुन्छ। तर, एआईले केवल डाटामा आधारित अनुमान गरेर प्रतिक्रिया दिन्छ, जसमा वास्तविक भावना हुँदैन।

मानिस सरह भावनात्मक बुझाइ विकास गर्न एआईलाई सचेतना दिनुपर्नेछ, जुन अहिलेसम्म सम्भव छैन। मानिसको भावना केवल व्यक्तिगत अनुभवमा आधारित हुँदैन, बरु स्मृतिहरू र समयक्रममा भएका सामाजिक अन्तरक्रियाहरूले पनि आकार दिन्छ। यसैकारण एआईलाई पूर्ण रूपमा मानिससरह बनाउनु चुनौतीपूर्ण मात्र होइन, सम्भवत: असम्भव पनि हुन सक्छ। अन्तत: एआई र मानिसबीचको यो भिन्नता सदैव रहन सक्छ। यद्यपि, एआई लाई पूरकका रूपमा प्रयोग गरेर मानिसको अनुभवलाई अझ प्रभावकारी बनाउन सकिन्छ। उदाहरणका लागि, एआईले मानसिक स्वास्थ्यसम्बन्धी समर्थन दिन वा मानिसको भावनात्मक अवस्थालाई बुझेर उपयुक्त सहायता दिन प्रयास गर्न सक्छ। तर, स्मृति र संवेदनाहरूको वास्तविक अनुभव बिना एआई कहिल्यै पनि मानिससरह पूर्ण रूपमा सोच्न र महसुस गर्न सक्षम हुने छैन।

एआईको निर्णय प्रक्रियामा पनि सीमाहरू छन्। मानिसले निर्णय गर्दा वर्तमान सन्दर्भ, भावनात्मक अवस्था, र विगतको अनुभवलाई ध्यानमा राख्छ। उदाहरणका लागि, चालकले घुमाउरो सडक देखेपछि गाडीको गति घटाउँछ र सावधानी अपनाउँछ। यस्तै, विद्यार्थीले पछिल्लो परीक्षामा फेल भएपछि आफ्नो अध्ययन पद्धति परिवर्तन गरेर अर्को पटक राम्रो नतिजा ल्याउन प्रयास गर्छ। तर, एआई मोडेलहरूले डाटाको विश्लेषण र गणनामा मात्र भर पर्छन् र संवेदनशील सन्दर्भलाई विचार गर्दैनन्।

यद्यपि, एआई र मानवको सहकार्यले धेरै क्षेत्रहरूमा विशाल लाभ पुर्‍याउन सक्छ। उदाहरणका लागि, अस्पतालमा एआईले बिरामीको रिपोर्टहरूको विश्लेषण गरेर चिकित्सकलाई सही निर्णय लिन सहयोग पुर्‍याउँछ। शिक्षा क्षेत्रमा, व्यक्तिगत ट्युटरका रूपमा प्रयोग गर्दा एआईले विद्यार्थीहरूको अध्ययन पद्धति र कमजोर पक्षहरूलाई विश्लेषण गरी उनीहरूका लागि व्यक्तिगत अध्ययन योजना बनाउन मद्दत गर्न सक्छ। व्यवसायमा पनि, एआईले पछिल्लो बजार ट्रेन्डहरू विश्लेषण गरेर कम्पनीहरूलाई रणनीतिक निर्णयहरू लिन सघाउँछ।

तर, एआईलाई मानवको प्रतिस्थापन नगरी पूरकका रूपमा प्रयोग गर्नुपर्छ। उदाहरणका लागि, चिकित्सकको काम एआई ले पूरै प्रतिस्थापन गर्न सक्दैन, तर डाटाको विश्लेषण गरेर सही उपचार योजना तयार गर्न मद्दत गर्छ। यसरी, एआईले मानिसको क्षमता बढाउन भूमिका खेल्छ, न कि उसलाई विस्थापित गर्न।

निष्कर्षमा, एआई र मानवको सिकाइमा समानता भए पनि, तिनका आधार र प्रक्रिया एकदमै फरक छन्। मानिसको सिकाइ अनुभव, भावना र सामाजिक अन्तरक्रियामा आधारित हुन्छ, जबकि एआईले केवल तथ्य र गणितीय मोडेलहरू प्रयोग गरेर सिक्छ। भविष्यमा, एआई र मानिसको सहकार्यले शिक्षा, स्वास्थ्य र अनुसन्धानमा प्रगति ल्याउन महत्वपूर्ण योगदान पुर्‍याउनेछ। जिम्मेवार र सुरक्षित रूपमा मानव र एआईको सहकार्यले हाम्रो जीवनलाई थप सहज र प्रभावकारी बनाउन सघाउनेछ। अन्तत:, यस सहकार्यले सम्भावनाहरूको नयाँ ढोका खोल्दै समाजलाई दिगो प्रगतितर्फ अगाडि बढाउनेछ। राससबाट साभार



## चुच्चे नक्सा अंकित १०० दरको नोट छापिने



काठमाडौं। नेपाल राष्ट्र बैंकले चुच्चे नक्सा अंकित १०० रुपैयाँ दरको नयाँ नोट छाप्ने भएको छ। सो नोट छाप्ने जिम्मा चिनियाँ कम्पनीलाई दिएको जनाएको छ। संविधान संशोधन गरेर चुच्चे नक्सा जारी भएपछि चुच्चे नक्सा अंकित गरेर पहिलो पटक नयाँ नोट छाप्न लागिएको हो।

नेपाल सरकार मन्त्रिपरिषद्ले गत वैशाखमा नेपाल राष्ट्र बैंकलाई १०० रुपैयाँ दरको नोटको डिजाइन परिवर्तन गर्ने स्वीकृति दिएको थियो। ७ जेठ २०७७ मा संविधान संशोधन मार्फत नेपालले लिम्पियाधुरा, लिपुलेक र कालापानीसमेत समेटेर नेपालको नयाँ नक्सा जारी गरेको थियो। १०० रुपैयाँ दरको नेपाली नोटमा नेपालको नक्सा अंकित भएकोले डिजाइन संविधान संशोधनसँगै १०० रुपैयाँ दरको नोटको डिजाइन पनि परिवर्तन गर्नुपर्ने भएको थियो।

नेपाल राष्ट्र बैंक ऐन अनुसार नोट छपाइ डिजाइन नेपाल राष्ट्र बैंकले नै गर्दै आएको छ। तर, नोटको डिजाइन र साइज परिवर्तन गर्नुपर्ने भएमा नेपाल सरकारको स्वीकृत लिनुपर्ने व्यवस्था छ। सोही अनुसार नेपाल सरकार मन्त्रिपरिषद्ले गत वैशाखमा चुच्चे नक्सा अंकित गर्ने गरी १०० रुपैयाँ दरको नोटको डिजाइन परिवर्तन गर्ने गरी स्वीकृति दिएको थियो।

अब डिजाइन परिवर्तन गरी चुच्चे नक्सा अंकित १०० दरको नयाँ नोट छपाइ गरी नेपाल राष्ट्र बैंकलाई डेलिभरी गर्ने जिम्मा चिनियाँ कम्पनीले पाएको हो। आइतबार एक सूचना प्रकाशित गर्दै चाइना बैंक नोट प्रिन्टिङ एन्ड मिन्टिङ कर्पोरेसनले नोट छाप्ने टेन्डर प्राप्त गरेको राष्ट्र बैंकले जनाएको छ। ग्लोबल टेन्डरमा चिनियाँ कम्पनीले ठेक्का प्राप्त गरेपछि कम्पनीसँग आशयपत्र माग गरिएको हो।

१०० दरको ३० करोड थान नोटको डिजाइन, छपाइ, सप्लाई र डेलिभरी गर्न केन्द्रीय बैंकले कम्पनीसँग आशयपत्र माग गरेको छ। ८९ लाख ९६ हजार ५९२ अमेरिकी डलरमा उक्त नोट छापिने भएको छ। हालको विनियम दर अनुसार १३४ रुपैयाँ ८४ पैसा अनुसार १ अर्ब २१ करोड ३१ लाख ४६५ रुपैयाँ पर्न आउँछ। यस अनुसार १०० रुपैयाँ दरको १ एउटा नोट छाप्ने ४ रुपैयाँ ०४ पैसा लागत पर्न आउने देखिन्छ।

## विनायकमा गणित क्लब गठन



मध्यपुर थिमि। विनायक शिक्षा निकेतनमा कात्तिक ९ गते गणित क्लबको गठन गरिएको छ। क्लबको अध्यक्षमा कक्षा १० की मोनिका प्रजापति, उपाध्यक्षमा कक्षा ९ का आश्रि प्रजापति, सचिवमा कक्षा १० की इदिस्ता प्रजापति, र कोषाध्यक्षमा कक्षा ८ की स्पर्शा श्रेष्ठ चयन भएका छन्। क्लबका अन्य सदस्यहरूमा कक्षा ८ बाट प्रगम श्रेष्ठ र परिशा मानन्धर कक्षा ९ बाट दिलेश प्रजापति, रेजिन श्रेष्ठ, एस्ट्रिना प्रजापति, अस्मिता मगर र रनव प्रजापति र त्यसैगरी कक्षा १० बाट शशिन श्रेष्ठ, लुजुन श्रेष्ठ रहेका छन्।

विद्यालयको पुस्तकालयमा आयोजना गरिएको उक्त कार्यक्रममा शिक्षकहरू शिवहरि प्रजापति, शैलेन्द्र कुमार भट्टाराई, सुजन कार्की, र दिपेन्द्र दंगालको उपस्थितिमा गणित शिक्षक नरेन्द्र प्रजापतिको संयोजनमा कार्यक्रम सम्पन्न भएको थियो।

क्लब गठनको अवसरमा विद्यार्थीहरूलाई गणितको महत्त्वका विषयमा छोटो प्रेरणादायक मन्तव्य दिएको गणित शिक्षक नरेन्द्र प्रजापतिले बताए, "गणित हाम्रो दैनिक जीवनको एउटा आधार हो। गणित क्लबको माध्यमबाट हाम्रा विद्यार्थीहरूमा गणितप्रतिको जिज्ञासा र आत्मविश्वास बढाउनेछ।" अन्य शिक्षकहरूले पनि गणित क्लबले विद्यार्थीहरूको सिर्जनशीलता र समस्यासामाधान क्षमतामा योगदान पुर्याउने विश्वास व्यक्त गरे।



# संविधानको उल्टो संशोधन विरुद्ध संघर्षको चेतावनी




काठमाडौं। संयुक्त मधेश संघर्ष समितिले आइतबार महोत्तरीको जलेश्वरमा नेपाली काँग्रेस र नेकपा एमाले द्वारा प्रस्तावित संविधान संशोधनको बिरुद्ध खबरदारी सभा गरेको छ । संयुक्त मधेश संघर्ष समिति प्रतिनिधि सभाबाट समानुपातिक समावेशी प्रतिनिधित्व हटाउने, थ्रेसहोल्डलाई १०% सम्म बढाउने, राष्ट्रिय सभाको वर्तमान प्रतिनिधित्वको स्वरुप बदल्ने जस्ता कुरालाई संविधानको प्रतिगामी संशोधनको प्रस्ताव भनेको छ । पहिचान आधारित प्रदेशको सीमांकन,पूर्ण समावेशी समानुपातिक पद्धति र निर्वाचन क्षेत्रको रुपमा प्रदेश, थ्रेस होल्डको समाप्ति, राष्ट्रिय सभाको वर्तमान स्वरुपमै जनसंख्याको हिसाबले प्रदेशहरुबाट प्रतिनिधित्व, प्रादेशिक राजनीतिक दलहरुको मान्यता, तथा राज्यका अंगहरुमा समानुपातिक समावेशी उपस्थिति संयुक्त मधेश संघर्ष समितिका मांगहर रहेका छन् । समितिमा तराई-मधेश लोकतान्त्रिक पार्टी, मधेशी राष्ट्रीय मुक्ति मोर्चा नेपाल, नेपाल सद्भावना पार्टी, जनअधिकार पार्टी र एकीकृत समाजवादी पार्टीका समान विचारका नेताहरू शामिल छन् । समितिले यस अघि भाद्र ३१ गते धनुषाको जनकपुरधाममा पहिलो खबरदारी सभा गरेको थियो । मधेशको ठूलो पर्व छठ सकिने बित्तिक्कै सबै जिल्लाहरु खबरदारी सभा सम्पन्न गर्ने र त्यसपछि कार्यक्रमको अर्को चरणमा प्रवेश गर्ने तमलोपाका प्रचार विभाग प्रमुख उमेश मण्डल ले बताए ।

सो खबरदारी सभामा बोल्दै पूर्व मन्त्री र माओवादी केन्द्रका नेता मातृका प्रसाद यादवले मधेशका नेताहरुले कसैले देला र पाइएला भन्ने लालच छोडेर संघर्षमा सहभागी हुनु पर्दछ किनभने यो मात्र एक मात्र बाटो हो भनेका थिए । यादवले अहिलेको सरकार मधेश दबाउने र राज गर्ने नीतिमा चलेको आरोप लगाए ।

तमलोपाका अध्यक्ष तथा पूर्व राष्ट्रियसभा सदस्य वृषेशचन्द्र लालले काँग्रेस र एमालेको भ्रष्टाचारको संरक्षण र मधेशी-थारुलाई राज्यको मामिलाबाट सकेसम्म वहिष्कृत गर्ने यी दुई प्राथमिकता र एजेन्डा रहेको बताउँदै स्थायित्वका कुरा गर्नेहरु कस्तो स्थायित्व चाहन्छन् भनी प्रश्न गरे । उनले काँग्रेस-एमालेको अनौठो गठबन्धन निर्बाध सुन तस्करी, भूटानी शरणार्थी काण्ड, ललिता निवास जग्गा घोटाला, गिरी टीबन्धु स्टेट घोटाला, सहकारीको अर्बौं रकम हजमपच जस्ता भ्रष्टाचारको काण्ड र भ्रष्टाचारीहरु संरक्षण तथा यस्तैको निरन्तरताको निमित्त स्थायित्वको कुरा गर्छन् भन्ने आरोप लगाए । दुई दलीय व्यवस्था ल्याएर काँग्रेस एमाले मात्र शासन गर्न खोजेको बताउँदै उनले कहीं न हुने यस्तो गठबन्धनको यात्रा यसैको निमित्त भएको भने । अध्यक्ष लालले संविधानको उल्टो संशोधनको कुरा गर्नेलाई मधेशी र थारुले उटाई दिने र यसको निमित्त जस्तो संघर्ष गर्नु परे पनि गर्न संयुक्त मधेश संघर्ष समिति तयार रहेको चेतावनी दिए । उनले मधेशका सबै शक्तिहरुलाई सत्ता गठबन्धनबाट बाहिरिएर संघर्षमा शामेल हुन अपील गरेका छन् ।

तमलोपाका वरिष्ठ नेता तथा संविधानसभा सदस्य डा. विजय कुमार सिंहले वर्तमान निर्वाचन पद्धतिको पैसा, जात, धर्म, प्रशासनिक हस्तक्षेप, पार्टीमा नेताको तानाशाही जस्ता विकृतिको अन्त्य र समुचित समावेशी प्रतिनिधित्वको निमित्त समावेशी समानुपातिक निर्वाचन पद्धति नै एक मात्र समाधान हो बताए । यसमा पार्टीको कार्यक्रममाथि जनताले वोट गर्ने छन्, नेताहरु समूहहरुबाट जनाधारप्राप्त र लोकप्रियहरुलाई उम्मेदवार बनाउन बाध्य हुनेछन्, नातावाद, पैसा, जात, धर्म र प्रशासनिक चलखेल न्यून हुनेछ तथा पार्टीहरुमा आन्तरिक लोकतन्त्रको वृद्धि हुन्छ, भने । जबर्जस्ती संविधान जारी गर्दा संविधानसभाको मंचबाट अब देश सहमतिको आधारमा चल्ने र जनताको आकांक्षा अनुरुप संविधानको संशोधन हुने भनेका नेताहरु जनतालाई धोखा दिइरहेको आरोप लगाए ।

मधेशी राष्ट्रिय मुक्ति मोर्चा नेपालको संयोजक र संविधान सभा सदस्य जगत प्रसाद यादवले वर्तमान काँग्रेस र एमालेको गठबन्धन जनता र सिमान्तिकरणमा परेका समूहहरुले पाएको केही अधिकार पनि खोस्न थालेको यिनको षडयन्त्रबाट देखिएको छ भन्दै यसलाई मोर्चा र संयुक्त संघर्ष समितिले कुनै हालतमा सफल हुन दिने छैन भने ।

अर्का संविधानसभा सदस्य एकीकृत समाजवादीको नेता शीतल झाले मधेश विरुद्ध भइरहेको षडयन्त्र विरुद्ध सबै पार्टीका मधेशी नेताहरू एक ठाउँमा आउनु पर्ने विचार राखेका थिए । खबरदारी सभामा मधेश सरकारका पूर्व मन्त्री मधेश प्रदेशमा माओवादी संसदीय दलको नेता भरत साह, नेसपाको अध्यक्ष रामकुमार महतो, जनाधिकार पार्टीको अध्यक्ष इमदाद गद्दी, मधेशी राष्ट्रिय मुक्ति मोर्चा महोत्तरीको अध्यक्ष बिजय यादव, तमलोपाका नेताहरु जोगिन्दर राय तथा बिमला साहले पनि मनतव्य राखेका थिए । महोत्तरी गाउँपालिकाको अध्यक्ष दिलिप पाण्डेको सभापतित्वमा भएको उक्त खबरदारी सभाको उद्घोषण तमलोपाको धिरेन्द्र सिंहले गरेका थिए ।

## राष्ट्रिय....

साख्वाःको प्रतिमामा दिउँसो ३ बजे माल्यार्पण गर्ने कार्यक्रम रहेको छ भने त्यसपछि थिमि बैंक्वेटमा शुभकामना आदानप्रदान एवं कार्यक्रम संचालन हुने सचिव श्रेष्ठले जनाएका छन् । उक्त अवसरमा पार्टीका केन्द्रीय नेताहरु, भक्तपुरका नेता कार्यकर्ताहरुका साथै मुक्तिकामी जनसमुदायको उपस्थिति रहने माओवादी केन्द्र मध्यपुर थिमि नगर समितिले जनाएको छ ।

नेपाल संवत नेपालको मौलिक राष्ट्रिय संवत हो । नेपाल संवतका प्रवर्तक शंखधर साख्वा हुन् । उनले नेपालका सबै जनताको ऋण तिरेर नेपाललाई ऋणमुक्त बनाएको दिनको सम्झनामा यो संवत शुरु मिथक रहेको छ। पूर्व प्रधानमन्त्री समेत रहेका प्रचण्ड बिगत ७ वर्षदेखि निरन्तर थिमि आई नेपाल संवतका प्रवर्तक राष्ट्रिय विभुती शंखधर साख्वाःप्रति सम्मान व्यक्त गरिरहेका छन् ।

प्रचण्ड नेतृत्वको पहिलो गणतान्त्रिक सरकारले नेपाल संवतलाई राष्ट्रिय संवत घोषणा गरेको थियो भने प्रचण्ड नेतृत्वको पछिल्लो सरकारले सरकारका सबै दस्तावेजहरुमा नेपाल संवत उल्लेख गर्ने निर्णय समेत गरेको छ। नेपाल संवतको पक्षमा रहेका प्रधानमन्त्रीको श्रेय प्रचण्डले पाएका छन् ।

## भक्तपुरमा.....

१४ गते बुधबार काग तिहार मनाउने, कार्तिक १५ गते दिनको ३:१४ बजेसम्म चतुर्दशी तिथि लाग्ने हुँदा कुकुर तिहार र १५ गते दिनको ३:१४ बजेपछि औंसी तिथि लाग्ने हुंदा लक्ष्मी पुजा मनाउने, कार्तिक १६ गते साँझ ५:१५ बजेपछि कछलाथ्व प्रतिपदा तिथि पर्ने भएकोले म्हःपूजा मनाउने, कार्तिक १७ गते साँझ ७:०१ बजेपछि द्वितीया तिथि पर्ने भएकोले भाई टिका (किजा पूजा) मनाउने निर्णय गरेको छ ।

बैठकमा भक्तपुर नपाका उपप्रमुख रजनी जोशी, शिक्षा, संस्कृति तथा स्वास्थ्य समितिका सदस्य भनपा ७ का वडाध्यक्ष उकेश कवां, नि. प्रमुख प्रशासकीय अधिकृत रामगोविन्द श्रेष्ठ, प्रशासकीय अधिकृत दामोदर सुवाल, भक्तपुर तलेजुका पूजारीहरु प्रजेशराज राजोपाध्याय, महेश कर्माचार्य, पदमलोचन कर्माचार्य, सिद्धिवीर कर्माचार्य, ज्योतिष वीरेन्द्रप्रसाद कायष्ठलगायतको उपस्थिति रहेको थियो ।

## सरकारका.

गर्दै भने, 'संसदको रोष्टममा भद्र तरिकाले मागिन्छ तिमीहरुसँग जवाफ, धेरै अभद्र भयौ भने सडकमै घिसारेर भए पनि मागिनेछ छ जवाफ ।'

सरकारले ७० नम्बर ल्याएको प्रचार गरेकोप्रति प्रश्न गर्दै उनले भने, 'अहिले नै सत्तरी आएपछि कस्तो होला त यो सरकारको सय नम्बर ? मैले निरन्तर भन्दै आएको छु- संसदको पहिलो दल कांग्रेस र दोस्रो दल एमालेलाई विश्वास, आदर्श र राजनीतिक उद्देश्यले जोडेको होइन, सुशासनको डरले जोडेको हो ।' पहिले एक्लै पार्टीको दुई तिहाई भएको बेलामा संसद भंग गरेर प्रतिगमन गर्ने नेताले अहिले कांग्रेसको बैशाखी टेकेर दुई तिहाईको घमण्ड गर्नुको कुनै अर्थ र औचित्य नहुने पनि उनको टिप्पणी थियो ।

अध्यक्ष 'प्रचण्ड'ले नक्कली भूटानी शरणार्थी लगायतका विभिन्न काण्डका मुद्दाहरु कहाँ पुगे भनेर सरकारलाई प्रश्न गरे । उनले नक्कली भूटानी शरणार्थी, बाँसबारी, गिरिबन्धु, बालमन्दिर लगायतका काण्ड कहाँ पुगे भनेर प्रश्न गर्दै उनले भने, ' यो प्रश्नको जवाफ दिने ल्याकत यो सरकारसँग छैन किनभने यो सरकार यी काण्ड खोतल्न होइन, मिलाउन बनेको हो ।' उनले पछिल्लो समय सरकारले सार्वजनिक संस्थान निजी क्षेत्रलाई दिने तयारी थालेको खबर आएको उल्लेख गर्दै एउटा पनि उद्योग बिचौलियालाई बेच्ने काम गरियो भने त्यो नेपाली जनतालाई सैह्य नहुने बताए ।

उनलेसरकारलेबाढीपहिरोको क्रममा चरम लापर्वाही गरेको उल्लेख गर्दै उद्धारमा जस्तै राहत र पुनर्स्थापनामा लापर्वाही नगरोस् भनेर खबदारी गरे । यो सरकार सुशासनका विरुद्ध बनेको, आफ्नै पार्टी पंक्तिलाई समेत ढाँटेर दलालको घरघरमा गएर रातको १२ बजे बनेको उल्लेख गर्दै अध्यक्ष प्रचण्डले आज सय दिन पुग्दानपुग्दै आफूहरुले गरेको आशंका सरकार आफैले पुष्टि गरेको बताए ।

आफूहरुले खबरदारीसभा राख्ने वित्तिकै सत्तारुढ दललाई एक ठाउँमा ल्याएर सडकबाट सरकारको विकल्प खोज्न थालिएको भन्दै होहल्ला गरिएको उल्लेख उनले भने, 'हामीले सरकार ढाल्न खबरदारीसभा गरेका होइनौं, बरु सरकार ढल्छ भनेर थप बेथिति र भ्रष्टाचारमा नजानुहोला भनेर खबरदारी गर्न मात्रै यो सभा गरिएको हो ।' माओवादीलाई सरकारको चिन्ता नभएको उल्लेख गर्दै उनले बरु आफूहरुले दलाल र पूँजीवादी दलहरुसँग सहकार्य गरेर गल्ती गरेको महसुस गरेको जनाए ।

भ्रष्ट र जाली नेताहरुसँग लागेर माओवादी पनि के के हो भन्ने जनतालाई परेको उल्लेख गर्दै अध्यक्ष प्रचण्डले सरकार ढालेर आफूहरुलाई सच्चिन मौका दिएकोमा कांग्रेस एमालेलाई धन्यवाद दिए । अब आफूहरुलाई जनतामा फर्कने अवसर प्राप्त भएको उल्लेख गर्दै उनले जनताको पूर्ण मुक्ति नहुँदासम्म लडिरहने बताए ।

'माओवादीले थालेको सुशासनको रेडर्क कसैले मेटाउन सक्ने छैन'

अध्यक्ष प्रचण्डले माओवादी नेतृत्वको सरकारले नेपालमै सुशासनको सवालमा ऐतिहासिक रेडर्क बनाएको उल्लेख गर्दै यसलाई कसैले मेटाउन नसक्ने बताए । उनले सुशासन, सामाजिक न्याय र आर्थिक समृद्धिकाको पक्षमा थालेको अभियान नेपालकै लागि पहिलो रेकर्ड भएको जिकिर गरे ।

अहिले देशका दलाल, भ्रष्ट र बिचौलियाहरुलाई माओवादी पार्टी र त्यसको नेतृत्व प्रचण्ड ठूलो त्रासको रुपमा देखिन थालेको र जनतालाई फेरि एकपटक माओवादीलाई नै बलियो बनाउनुपर्छ भन्ने चिन्ता देखिएको उल्लेख गर्दै अध्यक्ष प्रचण्डले जनताको हक अधिकारका लागि निरन्तर लड्ने प्रतिबद्धता व्यक्त गरे ।

'अब चुनाव एक्लै लडेर गल्ती सच्याउन चाहन्छौं' अध्यक्ष प्रचण्डले आफ्नो पार्टीले अब कसैसँग गठबन्धन नगरेर एक्लै चुनाव लडेर विगतमा गरिएको गल्ती सच्याउने बताए । उनले विगतमा कांग्रेस, एमाले जस्ता बेइमान दलसँग मिल्नु गल्ती भएकाले अब त्यसलाई सच्याउन चाहेको बताए ।

उनले माओवादी घटकहरुको एकता र आफ्नो पार्टीको सुदृढीकरणबाट एक्लै चुनाव लडेर २०६४ को अवस्थामा पुग्न सकिने धारण प्रकत गरे । माओवादीकै नेतृत्वमा 'ग्रीन रेभ्युलेसन' उल्लेख गर्दै उनले भने, 'जब माओवादी जनतातर्फ फर्कने छ, जनताले माओवादीलाई विगतको गल्तीको माफी दिँदै साथ दिने छन् ।'

उनले अब आफूहरुले जनता छोराछोरीलाई बन्दुक होइन, उत्पादनको औजार बाँडेर आत्मनिर्भर अर्थतन्त्रको विकास गर्ने बताए । उत्पादन वृद्धि गर्दै देशभित्रै लाखौं युवाहरुलाई आत्मनिर्भर बनाउने र भ्रष्टाचारविरुद्धको अभियानमा एकताबद्ध गरेर लैजाने जनाए । आफू उमेरले ७० वर्ष भए पनि अझै एउटा क्रान्तिको नेतृत्व गर्ने चाहना रहेको उनको भनाइ थियो ।

ज्ञानेन्द्र शाहलाई भेटेको भन्ने हल्लाको खण्डन अध्यक्ष प्रचण्डले पूर्व राजा ज्ञानेन्द्रलाई भेटेको भन्ने आरोपको खण्डन गरे । उनले पूर्व राजालाई भेट्ने कल्पनासमेत गर्न नसकिने बताए । 'कतिपयले प्रचण्डले झापामा पुगेर ज्ञानेन्द्रलाई भेट्यो भनेर हल्ला चलाएछन्, बरु म झापा विमानस्थलमा भएको थाहा पाएर उनी बीच बाटोबाट फर्केको सुनेको छैन', अध्यक्ष प्रचण्डले भने, 'जसले संघीय लोकतान्त्रिक गणतन्त्रको रक्षाका लागि अर्को क्रान्तिको तयारी गर्दैछ, उसले ज्ञानेन्द्र भनेको भन्नु सही होला ?'

'सहकारी ठगीमा जोडिएका सत्तापक्षीय नेतालाई किन छोइएन ?'

अध्यक्ष प्रचण्डले सहकारी ठगी प्रकरणमा दोषी देखिएका कांग्रेस एमालेका नेताहरुलाई अनुसन्धानमा नल्याएकोमा बिरोध गरे । उनलेअ संसदीय समितिले कांग्रेस र एमालेका नेताहरुलाई पनि दोषी ठहर गरेकोमा उनीहरुलाई अनुसन्धानको दायरामा नल्याएर प्रतिपक्षमा रहेका रवि लामिछानेलाई मात्रै पक्राउ गर्नु राजनीतिक विभेद र पूर्वाग्रहको उपज भएको बताए ।

आफू प्रधानमन्त्री हुँदा गल्ती गर्नेको सूचिमा प्रचण्ड भेटिए पनि पक्राउ गर भनेर राज्यसंयन्त्रलाई निर्देशन दिएको उल्लेख गर्दै अध्यक्ष प्रचण्डले भने, 'हाम्रो स्पष्ट कुरा के हो भने दोषी कोही पनि नछुटोस, निर्दोष कोही पनि नपरोस् ।' कतिपयले आजको खबरदारी सभालाई रवि लामिछानेलाई बचाउने सभाको रुपमा गलत ब्याख्या गरेको उल्लेख गर्दै उनले दोषी सबै सजायको भागिदार हुनुपर्ने तर सरकारले सत्तापक्षीय नेतालाई बचाउने र प्रतिपक्षीलाई कारवाही गर्ने प्रवृत्तिको बिरोध गरेको बताए ।

# नेपाल साफ महिला च्याम्पियनसिप २०२४ को फाइनलमा




नेपाल साफ महिला च्याम्पियनसिप २०२४ को सेमिफाइनलमा भारतलाई टाइब्रेकरमा ४-२ ले हराउँदै फाइनलमा प्रवेश गरेको छ । निर्धारित समय १-१ को बराबरीमा सकिएपछि खेल टाइब्रेकरमा पुगेको थियो ।

दशरथ रंगशालामा भएको खेलमा भारतले सुरुवाती १५ मिनेट नेपाललाई पूर्ण दबाबमा राखेको थियो । त्यसपछि नेपालले खेलमा केही अवसर सिर्जना गरेपनि त्यसको सदुपयोग गर्न सकेन । अन्त्यतिर भारतले पेनाल्टी क्षेत्र भित्रबाट लगातार आक्रमण गरेपनि डिफेन्सले खतरा टार्यो । दोस्रो हाफ निकै तनावपूर्ण रह्यो । सुरुवातमा रेखा पौडेलले रातो कार्ड खाएपछि मैदानमा दर्शकले बोतल फाल्दा खेल झन्डै १३ मिनेट रोकियो । खेल सुरु भएको केही बेरमा भारतले संगीता बास्फोरको उत्कृष्ट गोलमा अग्रता लियो । नेपालले लगत्तै भारतले गोलको खुसी मनाइरहेको अवस्थामा किकअफमा गोल गर्यो तर रेफ्रीले आफैं व्हिसल बजाएर खेल सुरुवात गरेपनि पछि गोललाई मान्यता दिइनन् । नेपालले पुनः खेल सुरु गरेको केहीबेरमा खेलमा विवाद भयो र झन्डै १ घण्टा खेल रोकियो ।

खेल सुचारु भएको केहीबेरमा नेपालले गोल फर्कायो । साम्बाले उत्कृष्ट गोल गर्दै खेल बराबरीमा ल्याइन् । त्यसपछि गोल हुन नसक्दा खेल बराबरी हुँदै टाइब्रेकरमा पुग्यो । टाइब्रेकरमा भारतको पहिलो प्रहारमा कप्तान आशालता देवीले पोस्टमा प्रहार गरिन् । साम्बाले नेपालको पहिलो पेनाल्टीमा गोल गर्दै नेपाललाई अग्रतामा पुर्याइन् । भारतकी मनिषाले दोस्रो प्रहारमा गोल गरिन् । नेपालकी गीता रानाले गोल गर्दै २-१ को अग्रतामा पुर्याइन् । त्यसपछि पुरुषोत्तम शिरोभ्करले गोल गर्दै खेल २-२ मा ल्याइन् । सविताले तेस्रो प्रहारमा गोल गर्दै खेलमा नेपालको अग्रता कायम राखिन् । भारतको चौथो प्रहार गरेकी रन्जना चानुको पेनाल्टीलाई अन्जनाले रोकिन् । त्यसपछि अमिषा कार्कीले गोल गर्दै नेपाललाई जित दिलाइन् ।

त्यसअघि पहिलो सेमिफाइनलमा बंगलादेशले भुटानलाई ७-१ ले हराउँदै फाइनलमा स्थान पक्का गरिसकेको छ । नेपाल र बंगलादेशबीच दशरथ रंगशालामा आज साँझ ६:३० बजे फाइनल सुरु हुनेछ । एन्फाले मंगलवार पत्रकार सम्मेलनमार्फत ३ ठाँउमा बुधवार बिहान ८:०० बजे टिकट विक्री गरिने जानकारी गराएको थियो ।

जावलाखेल खेल मैदान, सातदोबाटोस्थित एन्फा कम्प्लेक्स र भद्रकालीको स्थिति आर्मी हेडक्वाटरको गेट बाहिर विक्री गरिने एन्फा उपाध्यक्ष एवम् प्रतियोगिता संयोजक दीपक खतिवडाले जानकारी दिए । एन्फाले साधारणतर्फ ११ हजार र भिआइपी १ हजार मात्र टिकट विक्री गरिने बताइएको छ । साधारणतर्फ ५ सय र भिआइपी १ हजार रुपैयाँ टिकट दर तोकिएको छ । दशरथ रंगशालामा १५ हजार ४ सय दर्शक क्षमता रहेको एन्फाका प्रतियोगिता संयोजक सन्जिव मिश्रले जानकारी दिएका छन् । एन्फाले माउण्ट एभरेष्ट स्पोर्टस एण्ड इभेन्ट्स प्रालि सँगको सम्झौता रद्द भएको जानकारी दिदैं उपाध्यक्ष खतिवडाले ३० लाख रुपैयाँ प्राप्त गरेको र ५० लाख रुपैयाँ प्राप्त गर्न बाँकी रहेको बताए । एन्फाले ८० लाख रुपैयाँमा माउण्ट एभरेष्टसँग सम्झौता गरेको थियो । माउण्ट एभरेष्टले खल्तीबाट भौतिक रुपमा टिकट विक्री गर्दै आएको थियो । खल्तीबाट फाइनलका लागि विक्री भएको टिकट साधारणतर्फ ४ हजार १ सय तथा भिआइपीतर्फ १ हजार रद्द गरिएको एन्फाले जनाएको छ । सुरक्षालाई ध्यानमा राख्दै एन्फाले केहि बस्तु दशरथ रंगशाला भित्र लान निषेध गरेको छ ।

# २०२५ अझ कठिन हुने ! बाबा भेंगा र नोस्ट्राडेमसको भविष्यवाणी "विनाश सुरु हुने"





एजेन्सी । बाबा भेङ्गा र नोस्ट्राडेमसको भविष्यवाणी एकदम सहि मानिन्छ किनभने उनीहरूले सयौं वर्ष पहिले भनेको कुरा पूर्ण रूपमा सत्य साबित हुँदैछ र भइरहेका पनि छन् । यस्तो अवस्थामा एकपटक फेरि सन् २०२५ को चिन्ता थपिएको छ । दुवै भावी वक्ताले आगामी वर्ष २०२५ लाई विनाशको वर्ष भनेका छन् ।

फ्रान्सेली ज्योतिषी नोस्ट्राडेमसले सन् २०२५ मा विनाश हुने र यसको केन्द्र युरोपको मध्य भाग हुने बताएका थिए । बुल्गेरियाका रहस्यमय बाबा वेन्गाले पनि यस्तै कुरा भनेका थिए र विनाशकारी युद्धको चेतावनी दिएका थिए । अहिले विश्वका धेरै ठाउँमा युद्ध चलिरहेको र त्यसको अन्त्य हुने कुनै संकेत नदेखिएकाले उनको भविष्यवाणी सही हुने आकंलन रहेको देखिन्छ ।

फ्रान्सेली अगमवक्ता नोस्ट्राडेमसको मृत्यु १५६६ मा भएको थियो । उनका भविष्यवाणीहरू उनको पुस्तक लेस प्रोफेटिजमा संकलित गरिएको थियो र ४५० वर्ष पहिले जारी गरिएको थियो । यस पुस्तकमा हिटलरको तानाशाही, अमेरिकी राष्ट्रपति जोन एफ केनेडीको हत्या र कोरोना महामारीको बारेमा जानकारी दिइएको थियो । यो पुस्तकमा लेखिएको छ कि युरोपेली भूमिका मानिसहरूले क्रूर युद्ध लड्नेछन् । उनले प्लेगको महामारी यसरी फैलिने र शत्रुभन्दा खतरनाक हुने बताएका थिए ।

बाबा वेङ्गा भनाई

बुल्गेरियाका रहस्यमय भविष्यवक्ता बाबा वेन्गाले पनि यस्तै कुरा भनेका थिए । उनका अनुसार सन् २०२५ विश्वका लागि विनाशको वर्ष हुनेछ र धेरै विनाश हुनेछ । यसबाहेक उनले सोही वर्ष पृथ्वीमा एलियनको आगमन र टेलिप्याथीको पूर्णता भएको दाबी गरेका थिए । राम्रो कुरा के हो भने नोस्ट्राडेमसको भविष्यवाणीअनुसार रुस-युक्रेन युद्ध समाप्त हुनेछ किनभने दुवै सेना थकित हुनेछन् । यद्यपि, ब्राजिलमा ज्वालामुखी विस्फोट र ठूलो बाढीको दाबी पनि गरिएको थियो ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमिTIMES

# "अग्निदहन"को "दाइ दाइ नभन मलाई" गीत सार्वजनिक

काठमाडौं । बोक्सीको अन्धविश्वासविरुद्ध निर्माण गरिएको फिल्म 'अग्निदहन'को 'दाइ दाइ नभन मलाई'बोलको नयाँ गीत सार्वजनिक भएको छ । सार्वजनिक गीतमा पार्वती जिसी र तुलसी क्षेत्रीको स्वर रहेको छ । परशुराम अधिकारीको संगीत रहेको गीतमा लोकमणि पौडेलको रचना रहेको छ। धर्मेन्द्र पौडेलले केरियोग्राफी गरेको गीतको भिडियोमा अनुपमा भण्डारी, प्रमिला तुलाचन, रमा त्रिपाठी, सनिशा भट्टराई, तुलसी क्षेत्री, सरला कुमारी पाण्डे, प्रसिना आचार्य लगायत रहेका छन् । विवाहको सेटअपमा तयार परिएको 'दाइ दाइ नभन' रत्यौली खेल्दै गाइने भ्याउरे पाराको गीत रहेको छ । भिडियोमा पश्चिमाञ्चल क्षेत्र वरपर प्रचलनमा रहेको यस रत्यौलीमा छोरी मान्छे लोग्ने मान्छे बनेर नाच्ने प्रचलन देख्न पाइन्छ। जसलाई 'लुठो' बन्ने भन्ने गरिन्छ। भिडियोमा रमा त्रिपाठी लूठो बनेकी छन् ।

साहित्यकार तथा पत्रकार लोकमणि पौडेलको उपन्यास ' अग्निदहन' मा आधारित रहेर निर्माण गरिएको शिक्षामूलक सामाजिक यो फिल्म आगामी मंसिर ७ गते रिलिज हुँदैछ। यस फिल्मलाई मान्छे बोक्सी हुन्न कहिल्यै राष्ट्रिय जागरण प्रतिष्ठान नेपालले निर्माण गरेको हो । यो संस्था बोक्सी कुप्रथालाई शिक्षा र चेतनाको माध्यमद्वारा अन्त्य गरी नेपाललाई बोक्सी कुप्रथाको अन्धविश्वासबाट मुक्त गराएरै छोड्ने अठोटका साथ २०७१ सालमा स्थापना गरिएको हो ।

फिल्ममा घनश्याम लामिछानेको निर्देशन छ । निर्देशक लामिछाने एउटा डरलाग्दो विषयलाई फिल्ममा उठान गरिएको बताउँछन् । 'फिल्ममा थ्रिल, सस्पेन्स सबै छ । उपन्यासलाई हामीले सिनेम्याटिक तवरबाट फिल्ममा उतारेका छौं । फिल्ममा दर्शकले सन्देश र उत्सुकता दुवै पाउनुहुनेछ', उनी भन्छन् । मान्छे कोही पनि बोक्सी हुँदैन भन्ने सोचलाई देशव्यापी रुपमा अभियानको रुपमा अगाडि बढाउन फिल्म निर्माण गरिएको उनको भनाइ छ ।

फिल्मका परिकल्पनाकार कोविदशरण उपाध्यायले फिल्मलाई तराईका जिल्लामा प्रदर्शन गराउनका लागि मैथिली र भोजपुरी भाषामा समेत डबिङ गरिएको बताएका छन् । उनका अनुसार फिल्म अंग्रेजी भाषामा पनि सबटाइटल गरिएको छ । मान्छे बोक्सी हुन्न कहिल्यै राष्ट्रिय जागरण प्रतिष्ठानका अध्यक्षसमेत रहेका कोविदचरण उपाध्ययले नेपालमा बोक्सी प्रथा उन्मुलनका लागि यो फिल्म बनाइएको बताए । स्थागत रूपमा निर्माण गरिएको फिल्म भएकाले यस निर्माता कोही पनि नरहेको प्रतिष्ठानका अध्यक्ष उपाध्यय बताउँछन् । यस फिल्मको विशिष्ट संरक्षकको रूपमा भुवनेश्वर पौडेल र मोहन राज पौडेल रहेका छन् । फिल्मको मुख्य भूमिकामा प्रकाश घिमिरे, प्रमिला तुलाचन, माओत्से गुरुङ, अनुपमा भण्डारी, तुलसी क्षेत्री, विष्णु वास्तोला, ताराबहादुर गुरुङको अभिनय छ ।

फिल्ममा लोकमणि पौडेलको कथा, पटकथा र संवाद, कोविदशरण उपाध्यायको परिकल्पना, परिच्छेद सेनको मुख्य सहायक निर्देशन, शंकर पाण्डेको प्रोडक्सन डिजाइन, दीर्घ गुरुङको छायांकन, दीर्घ खड्काको सम्पादन, राजेन्द्र मोक्तानको रंग संयोजन छ । चलचित्र विकास बोर्डले 'विशेष चलचित्र अवार्ड' समेत दिइसकेको यो फिल्मलाई निवर्तमान राष्ट्रपति विद्यादेवी भण्डारी, प्रधानमन्त्री केपी शर्मा ओली, निवर्तमान प्रधानमन्त्री पुष्पकमल दाहालले हेरिसकेका छन् ।

यस्तै, केही समय अघि यो फिल्म भारतको बिहारस्थित सीतामढीमा कमाण्डेन्ट अफ एसएसबी-२० औं बटालियनमा बटालियन प्रमुख गिरीशचन्द्र पाण्डेय र फिल्मको निर्माण पक्षको उपस्थितिमा प्रदर्शन गरिएको थियो ।

# "माखायात ग्वंगः माः" को दसलाख भ्यूजको उत्सव

काठमाडौं । रोजगारीको क्रममा हंगकंगमा रहँदै आएका गायक तथा संगीतकार कृष्णभक्त महर्जन र गायिका बानिका प्रधानको स्वर रहेको नेपालभाषाको गीत 'माखायात ग्वंगः माः' को म्युजिक भिडियो युट्युबमा १० लाख भ्यूज पुगेको अवसरमा कार्यक्रमको आयोजना गरी उत्सव मनाइएको छ । उक्त युगल गीतको १० लाख भ्यूजको उत्सव हरिसिद्धि ललितपुरमा मनाइएको हो । दशैंको फुलपाटीका दिन पाटनको अशोक हलमा उक्त गीतको प्रिमियर गरिएको थियो ।

म्यूजिक भिडियोका कलाकार, प्राविधिकहरुको उपस्थितीमा केक काट्दै १० लाख भ्यूज पुगेको खुसियाली मनाइएको थियो । कार्यक्रममा गीतका संगीत संयोजक रहेका हरिशरण सायमिले दुई सातामै १० लाख भ्यूज पुगेकोमा सम्पूर्ण नेपाल भाषा प्रमी दर्शकहरुलाई कृतज्ञता तथा धन्यवाद व्यक्त गरेका थिए । वरिष्ठ सिने पत्रकार विजयरत्न तुलाधर, पत्रकारद्वय दर्शनबीर शाक्य, बिराजकाजी राजोपाध्यायले पछिल्लो समय नेपालभाषाका गीतहरु सामाजिक संजालमा लोकप्रिय हुँदै गएको भन्दै खुसी व्यक्त गरे । साथै नेपाल भाषाको गीत तथा म्युजिक भिडियोको दर्शकहरु सामाविक सञ्जालमा बढ्दै गइरहेको कारण पनि अहिले नेपाल भाषाको म्युजिक भिडियो निर्माणको कार्यसमेत बढ्दै गइरहेको छ ।

कार्यक्रममा कलाकार एवम् संचारकर्मीद्वय रामकृष्ण खड्गी र स्वतन्त्र संसार महर्जनले गीत र म्युजिक भिडियो टीमलाई बधाई दिँदै गीत समेत गाएर प्रस्तुत गरेका थिए ।

म्युजिक भिडियोमा आराध्यालक्ष्मी खड्गी र किरण जोशीलाई फिचर गरिएको छ । बाल मुकुन्द प्रजापतिको निर्देशन रहेको गीतलाई शैलेश श्रेष्ठ लुभुले छायांकन तथा सम्पादन गरेका हुन् ।

# वरिष्ठ गायक मधु क्षेत्रीलाई भक्तपुरमा सम्मान

भक्तपुर । वरिष्ठ गायक मधु क्षेत्री सम्मानित भएका छन् । भक्तपुर साङ्गितिक समाजले उनलाई सम्मान गरेको हो । फूलै फूल मात्र पनि होइन रैछ जीवन, पानी खाने निउले तिम्रो घर आउला,हुरीले उडाउन सकेन,साईली र माहिली पैला गए छन् बाउ बाजेको नाकै काटेर,लागायत का थुप्रै कालजयी गीतका गायक क्षेत्रीलाई सम्मान गर्न पाउँदा समाजले सन्तोष व्यक्त गरेको छ ।

भक्तपुर साङ्गितिक समाजद्वारा शुभ दीवापली,नेपाल संवत ११४५ न्हुंद र छठ पर्व २०८१ को आयोजनामा भएको शुभकामना आदान प्रदान कार्यक्रमको अवसरमा बरिस्ठ गायक क्षेत्रीलाई सम्मान गरिएको समाजका अध्यक्ष अल्बर्ट बज्राचार्यले बताए । साङितिक क्षेत्रमा विगत ४ दशक भन्दा बढि समयदेखि अतुलनिय योगदान पुर्याउदै आएका क्षेत्रीलाई सम्मान गर्न पाउनु खुशी र गौरबको कुरा भएको उनको भनाइ छ ।

कार्यक्रममा गायक क्षेत्रीले शुभकामना मन्तव्य राख्दै आफुले पहिला रेडियो नेपालमा गरेको संघर्षदेखि आफ्ना समकालीन मित्र गायक उदितनारायण झा सँगसँगै बिताएका ति दिनहरु सम्झिदै आफ्नो लोकप्रिय गीत पनि गाएका थिए।

सो कार्यक्रममा वरिष्ठ गीतकार तथा समाजका सल्लाहकार सुवासचन्द्र ढुंगेलले समाजले नेपाली संगीतलाई थप उचाईमा पुर्याउन गर्दै आएको विभिन्न सांगीतिक कार्यक्रमको स्मरण गरे निरन्तर सक्रियताको शुभकामना ब्यक्त गरे ।

कार्यक्रममा समाजका निवर्तमान अध्यक्ष प्रवीण शाहीले गीतकार लक्ष्मीप्रसाद कसुलाको शब्दमा र आफ्नै आवाज अनि संगीतमा भर्खरै रेकर्ड गरेको नयाँ गीत आउँ नाचौ बोलको गीतको लिरिकल भिडियो सार्वजनिक गरिएको थियो । र्यक्रममा कार्य समिति सदस्य रविन थापा स्वागत मन्तव्य राखेका थिए भने कार्यक्रमको संचालन रेडियोकर्मी किरण सुवालको रहेको थियो । सो अवसरमा गीत संगीत र साहित्यकर्मीहरुको उल्लेख्य उपस्थिति रहेको थियो ।

# कुखुरा वा अण्डा, पहिले कुन ? दुबै सही जवाफ हुन सक्छ !

यो एक पुरानो प्रश्न हो: कुन पहिले आयो, कुखुरा वा अण्डा ? यो यस्तो प्रश्न हो कि यसको जवाफले तर्ककर्ताहरूलाई सन्तुष्ट पार्न धेरै गाह्रो छ । यसबारे धेरै किसिमका अनुसन्धानहरू भएका छन्, धेरै तर्कहरू दिइएका छन् । सायद तपाईलाई पनि यो प्रश्नको सहि उत्तर थाहा छ। तर जीवहरूको विकासको विज्ञानलाई विकास विज्ञान भनिन्छ । यस प्रश्नको जवाफ धेरै रोचक छ । तपाईलाई यो थाहा पाउँदा अचम्म लाग्न सक्छ कि दुबै उत्तर सही छन् र यसको पछाडिको कारणले यस्तो किन हो भनेर ज्ञान हुन्छ ।

अण्डाहरू पृथ्वीमा जीवनको रूपमा लामो समयसम्म रह्यो । इभोलुसन विज्ञहरू भन्छन् कि अण्डा कुखुराको लाखौं वर्ष पहिले विकसित भयो, तर यसको मतलब अण्डा पहिले आएको होइन ।

अण्डाको महत्व

"पहिलो अण्डाको विकास जीवनको जन्मसँग नजिकबाट जोडिएको हुन सक्छ जुन हामीलाई थाहा छ," जुल्स होवार्ड भन्छन्, एक प्राणीविज्ञान रिपोर्टर र अण्डाको विकासको बारेमा पुस्तक इन्फिनिट लाइफका लेखक । विशेषज्ञहरूले तर्क गर्छन् कि अण्डा जनावरहरूको लागि जीवन-सहायता क्याप्सुल जस्तै हो, आनुवंशिक विविधता र अद्वितीय सिर्जना गर्ने अवसर प्रदान गर्दछ ।

अण्डा पहिले आयो, यदि

यदि हामीले अण्डा जनावरको लागि 'जीवन-समर्थन गर्ने क्याप्सुल' मात्र हो भनेर स्वीकार गर्छौं भने, त्यसो भए पक्कै पनि यसलाई कुनै न कुनै रूपमा अण्डा मानिनेछ । प्रारम्भिक अण्डाहरू आज हामीले थाहा पाएको भन्दा धेरै फरक थिए । तिनीहरूलाई जेलीफिस वा समुद्रमा कीराहरू जस्ता प्राणीहरूले दिएका थिए । यो पृथ्वीमा जीवन देखा पर्नु भन्दा लाखौं वर्ष पहिले थियो, यो कुखुरा भन्दा पहिले अण्डा आयो भन्न देखिन्छ ।

अनि कहिले आयो कुखुरा ?

फ्लिन्डर्स युनिभर्सिटीका पालेओन्टोलोजिस्ट र प्राचीन चराहरूको विशेषज्ञ डा एलेन माथर भन्छन् : 'यदि तपाईंले यसलाई अण्डाको सन्दर्भमा समग्र रूपमा हेर्नुभयो भने, जवाफ पक्कै अण्डा हो । तर कुखुराको बारेमा प्रश्नको अर्को पक्ष पनि छ। कुखुराहरू जंगली चराहरूबाट विकसित भएका थिए जुन मानिसहरूको नजिकै बस्नको लागि अनुकूल भयो । जसका कारण आधुनिक प्रजातिका कुखुरालाई घरपालुवा बनाइयो ।

कति वर्ष पहिले?

पहिले, शोधकर्ताहरूले विश्वास गरे कि पहिलो वास्तविक घरेलु कुखुरा लगभग १०,००० वर्ष पहिले देखा पर्यो । यद्यपि, पछिको विश्लेषणले देखाउँछ कि धेरै तथाकथित 'कुखुरा' नमूनाहरू वास्तवमा अन्य जंगली चराहरू जस्तै हाँसहरूका थिए । हालैका अध्ययनहरूले दक्षिणपूर्वी एशियाका मानिसहरूले यी चराहरूलाई पहिलो पटक १६५० ईसापूर्व र १२५० ईसापूर्व बीचमा पालेका थिए । यससँगै कुखुराको अधिकतम उमेर ३ हजार ५ सय वर्ष हुनेछ ।

कुखुरा नहुँदा पनि अण्डा हुन्थ्यो ।

अर्कोतर्फ, अण्डाहरू डायनासोर हरूको समयदेखि लाखौं वर्ष अघिका छन्, जुन प्रारम्भिक जुरासिक अवधिमा डायनासोरहरूले पहिलो कडा खोलका अण्डाहरू राखेका थिए । यदि हामीले हाम्रो खोजलाई चराहरूले राखेका अण्डाहरूमा सीमित राख्यौं भने पनि, कुखुरा अझै पनि दस लाख वर्ष भन्दा बढी पछि छ । जीवाश्म प्रमाणहरूले संकेत गर्दछ कि सरीसृप र डायनासोर हरूले घरेलु कुखुराको धेरै अघि अण्डा राखिरहेका थिए । त्यसकारण, कुनै पनि विकासवादी दृष्टिकोणबाट, अण्डा निश्चित रूपमा कुखुराको अगाडि आयो ।

त्यसोभए सही प्रश्न के हो ?

'तपाईंले प्रश्नलाई कसरी व्याख्या गर्नुहुन्छ भन्ने आधारमा, दुवै जवाफ सही हुन सक्छन्,' डाक्टर माथर भन्छन्, कुखुरा वा अण्डा पहिले विकसित भयो भन्ने प्रश्नको सट्टा कुखुराको अण्डा वा कुखुराको अण्डा सोध्नु हो । स्पष्ट पजल यो हो कि कुखुरा कुखुराको अण्डाबाट मात्र निस्कन्छ, जुन स्वाभाविक रूपमा अर्को कुखुराले मात्रै राख्न सक्छ भन्ने सोच्न सक्छ ।

डा. माथर बताउँछन् कि पहिलो साँचो कुखुरा आंशिक रूपमा घरपालुवा रातो जंगली चराको अण्डाबाट निस्कियो । यसको मतलब यो हो कि कुनै पनि साँचो कुखुराले अण्डा राख्नु अघि पहिलो साँचो कुखुरा निस्कियो । त्यसकारण, यदि प्रश्नले कुखुराको अण्डालाई बुझाउँछ भने, जवाफ कुखुरा हो ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ अङ्क १४ ने.सं. ११४५ कछलाथ्व पञ्चमी कार्तिक २१ गते बुधबार, २०८१ 06 Nov. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## नेपाल संवत्लाई राष्ट्रिय संवत् बनाउने कि नबनाउने ?

काठमाडौं । नेपाल संवत्को नयाँ वर्ष फेरिने तिथि अर्थात् कात्तिक शुक्ल प्रतिपदा अर्थात कछलाथ्व पारुबाट नेपाल संवत् ११४५ प्रारम्भ भईसकेको छ । यस तिथिमा नेवार समुदायले दुईवटा पर्व मनाउँछन्– एउटा नयाँ वर्ष र अर्को आफूलाई आफैले पुजा गर्ने म्हपूजा । यस वर्ष यो पर्व नेवार समुदायको बसोवास रहेको नेपाल मन्दललगायत देशका विभिन्न स्थानमा विभिन्न कार्यक्रमको आयोजना गरी मनाएको छ । देशका विभिन्न स्थानमा मनाइएका यी कार्यक्रममा मुख्यतया नेवा: समुदायकै सहभागितामा यो पर्व मनाइएको पाइन्छ । तर नेपालको संघीय राजधानीमा भने यो पर्वमा दलका उच्च पदस्थ व्यक्तिका साथै सरकारकै प्रमुखको समेत सहभागिता रहेको थियो । नेपालमा अहिले राज्यस्तरबाट नेपाल संबत्लाई सरकारी संयन्त्रमा समेत प्रयोग गर्ने कार्य विगत वर्षबाट शुरु भएको थियो । जस अन्तर्गत सरकारी लेटर प्याडमा नेपाल संवत्को तिथी मिति प्रयोग हुने गरेको छ । साथै बागमती प्रदेश अन्तर्गत प्रदेश सरकारले सरकारी कामकाजको भाषामा नेपाल भाषा र तामाङ भाषालाई मान्यता दिइएको छ । जुन नेपालमा विगत लामो समय देखि भाषा आन्दोलन र सांस्कृतिक आन्दोलनको रुपमा नेपाल सवंत्लाई राज्यले मान्यता दिनुपर्ने भन्दै आन्दोलन शुरु भएको थियो । जुन आन्दोलनको उपलब्धिको रुपमा जनजातिहरुले नेपाल संवत्, नेपाल भाषा र तामाङ भाषालाई




राज्य संयन्त्रको मान्यता प्राप्त भएकोमा सफलता नै मान्नु पर्दछ । अहिले पुन: संचारको क्षेत्रमा समेत नेपाल भाषा र मैथली भाषाबाट समाचार सम्प्रेषण गर्न सरकारी संचार निकाय रासस र नेपाल टेलिभिजनले समाचार बुलेटिन प्रशारण शुभारम्भ गरेको छ । यो देशका आम जनजातिहरुको लागि खुशीकै विषय हो । यस घटनाक्रमले नेपालका शासकहरु देशमा रहेका जनजातिहरुको भाषा, संस्कृति र सामाजिक जनजीवन प्रति उद्धार बन्दै गएको आकंलन गर्न सकिन्छ ।

तर अहिले पनि प्राप्त यी उपलब्धिहरुलाई विवादित बनाउने र देशमा एकल जातिय, सांस्कृतिक र भाषिक नीतिलाई कायम गर्न केही तत्व लागि परेको छ । जुन हालैको घटनाक्रमले पनि देखाएको छ । देशमा मनाईने सांस्कृतिक पर्वलाई विवादित बनाउने र भाषामा जटिलता सिर्जना गरेर त्यसलाई पुन: खारेज गराउनकै लागि पनि राज्य संयन्त्रकै प्रयोग भइरहेको छ । किनकी राज्य संयन्त्र एकातिर जनजातिका विषयमा उद्धार रहेको देखिए पनि तिनका क्रियाकलापहरुले जनजातिले मनाउने सांस्कृतिक मौलिक परम्परालाई विवादित बनाउने तर्फ अग्रसर देखिएको छ ।

यसै सन्दर्भमा २०५५ सालमा प्रकाशित सत्यमोहन जोशीको पुस्तक 'नेवारहरूको महान् चाड म्हपूजा (किन र कसरी)' अनुसार, नेवार जातिको समाजमा यो म्हपूजा गर्ने पद्धति कुन बेलादेखि सुरु भयो होला यो कुरा निश्चित रुपले भन्न कठिन छ तर नेवार जातिको समाज जति पुरानो छ त्यति नै पुरानो हुन सक्छ ।

यो म्हपूजा शरद ऋतुको अन्त्यतिर हेमन्त ऋतु लाग्ने बेलामा बालीनाली भित्र्याउने काम सकिसकेपछि साल तमामीको हिसाबले वर्षदिनको आयव्यय तथा लेनदेनको लेखाजोखा समाप्त भएपछि चान्द्रमासको तिथिअनुसार कार्तिक शुक्लपक्ष प्रतिपदा तिथिको दिन नयाँ सूर्य उदाएको हेरेर मनाउने परम्परा छ ।

नेपाल संवत्लाई लिएर झन्डै सय वर्षदेखि विभिन्न कोणबाट बहस हुँदै आएका छन् । डा. बालगोपाल श्रेष्ठका अनुसार, विद्वान् धर्मादित्य धर्माचार्यले सम्पादन गरेको 'बुद्धधर्म व नेपालभाषा नामक' पत्रिकामार्फत सन् १९२८ मा पहिलोपटक नेपाल संवत्को नयाँ वर्षलाई राष्ट्रिय पर्वका रूपमा मनाउन आह्वान गरिएको थियो । पछि सन् १९५४ मा 'नेपालभाषा साहित्यिक संस्था च्वसापासा'ले हनुमानढोका दरबारको नासलचोकमा नेपाल संवत्को पहिलो सार्वजनिक नयाँ वर्ष समारोह आयोजना गरेको थियो ।

खासगरी प्रजातन्त्रको स्थापनापछि नेपाल संवत्लाई राष्ट्रिय मान्यता दिनुपर्ने आवाज उठे । तीसको दशकसम्म आइपुग्दा नेपाल संवत्लाई राष्ट्रिय संवत् बनाउनुपर्छ वा बनाउनुहुँदैन भनी विद्वान् वर्गबिच पेचिला बहस भएका थिए । त्यतिबेला नेपाल संवत्लाई राष्ट्रिय स्तरबाट मान्यता दिनुपर्ने माग नेवार सुमदायले गरेका थिए ।

यसै मेसोमा २०३८ कात्तिक १९ गतेको 'मानस' पत्रिकामा इतिहासकार महेशराज पन्तले आलेख लेखे । उनले ऐतिहासिक सन्दर्भ र आफ्ना तर्कसहित आलेखमार्फत स्पष्ट रुपमा भने– 'विक्रमसंवत्को ठाउँ नेपालसंवत्ले पाउनुपर्छ भनी माग गर्नुचाहिँ पक्कै पनि दुस्साहस सिवाय अरु केही होइन ।'

यसको लगत्तै नेवारहरूले एउटा सभामा पन्तको आलेखको विरोध गरेका थिए । २०३८ मंसिर ८ मा 'विश्वदूत' पत्रिकामा पन्तले अर्को आलेख लेखेका छन्, 'कुनै पूर्वाग्रह नराखी शुद्ध इतिहासको मननको आधारमा मैले प्रकट गरेको विचारले सम्प्रदायवादीहरूलाई निकै छोएछ । यसैले उनीहरूले निकै तल्लो तहमा ओर्लेर सभामा मलाई निकै गालीगलौज पनि गरेछन्; पत्रिकामा परोक्ष तवरले मेरो लेखको विरोधमा तथ्य कुरा हालेर होइन, विरोधको लागि विरोध गरेर लेख पनि छपाए ।'

कात्तिक १९ गतेको 'मानस'

बाँकी पेज ७ मा

## पूर्व प्रम देउवाको नेमकिपा अध्यक्ष बिजुक्छेंलाई सुझाव




भक्तपुर । पूर्व प्रधानमन्त्री तथा नेपाली काँग्रेसका सभापति शेरबहादुर देउवाले नेमकिपाका अध्यक्ष नारायणमान बिजुक्छें 'रोहित'लाई भक्तपुरका अन्य पार्टीसंग पनि समन्वय गर्न सुझाव दिएका छन् । भक्तपुर नेमकिपाको मात्र नठान्न देउवाले सुझाव दिएका हुन् । "भक्तपुरमा नेमकिपाका अध्यक्ष नारायणमान बिजुक्छेँ हुनुहुन्छ, जिल्लाका सबै पार्टीलाई मिलाएर लैजानु पर्ने उहाँको दायित्व हो । उनले भने, "भक्तपुर मात्रै हाम्रो हो भन्ने ठान्नु भएन र भक्तपुरमा जे पनि गर्न पाइन्छ भन्नपनि पाइदैन ।"

कार्यक्रममा उनले प्रधानमन्त्री केपी ओलीको क्रियाकलापले काँग्रेसलाई फाइदा पुगेको पनि बताएका छन् । प्रतिपक्षीको आलोचनालाई खराब मान्न नहुने भन्दै उनले विपक्षीबाट आएका आलोचनालाई गम्भिरताका साथ लिएर सरकारले परिणाममुखी काम गरेर देखाउनु पर्ने आवश्यकता औल्याएका छन् । आफूले प्रधानमन्त्रीलाई प्रोत्साहन गरिरहेको र सरकार पुरै समय चल्ने समेत उनले बताएका छन् ।

शनिवार भक्तपुर क्याम्पस परिसरमा नेपाली कांग्रेस जिल्ला कार्य समिति भक्तपुरले नेपाल संवत् ११४५ को अवसरमा आयोजना गरेको शुभकामना आदानप्रदान कार्यक्रममा सभापति देउवा

बाँकी पेज ७ मा

## राष्ट्रिय विभुती शंखधर साख्वाको प्रतिमामा पुर्व प्रम प्रचण्डद्वारा माल्यार्पण




काठमाडौं । नेकपा (माओवादी केन्द्र) अध्यक्ष तथा पुर्व प्रधानमन्त्री पुष्पकमल दाहाल "प्रचण्ड" ले नेपाल संवत् ११४५ को पूर्व संध्यामा मध्यपुर थिमि वडा नं ४ शंखधर चोकमा अवस्थित राष्ट्रिय विभुती शंखधर साख्वाको प्रतिमामा बिहीबार माल्यार्पण गरेका छन् ।

माल्र्यापण कार्यक्रम पछि नेकपा माओवादी केन्द्र मध्यपुर थिमि नगर समिति भक्तपुरले नयाँ वर्ष नेपाल संवत् ११४५ को अवसरमा आयोजना गरेको कार्यक्रमलाई सम्बोधन गर्दै नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले नेपाल संवतले नेपालको राष्ट्रिय भावना, स्वाभीमान, स्वाधीनता, आत्मसम्मान र मौलिक संस्कृतिको प्रतिनिधित्व गर्ने भएकाले यसलाई राष्ट्रिय मान्यता प्रदान गरिएको बताएका छन् ।

बाँकी पेज ६ मा



## नेपाल संवत्, यसको गरिमामय इतिहास र वर्तमान अवस्था

राजेन्द्र प्रसाद श्रेष्ठ,

नेपाल सवत् अन्तर्राष्ट्रिय जगत्मै आफ्नो देशको पहिचान बोकेको एकमात्र संवत् हो । नेपाल संवत् नामैले देशको पहिचान दिन समर्थ छ । विश्वमा अरु कुनै पनि त्यस्तो सवत् प्रचलनमा भएको देखिँदैन, जसले देशको नामबाटै आफ्नो संवत्लाई चिनाएको होस् । त्यसैले, नेपाल संवतले सिंगो नेपालको राष्ट्रिय स्वाधीनता, एकता र राष्ट्रियतालाई आफूभित्र समेटेको छ भन्दा अत्युक्ति हुँदैन ।

नेपालमा धेरै संवत् प्रचलनमा आएका भेटिन्छन् । इस्वी (ग्रेगोरियन), शक, मानदेव, विक्रम, हेर्बु, हिजरी, चीनियाँ, कलिगत लगायत अरु थुपै सम्वत् हामीकहाँ चलनचल्तीमा देखिन्छन् । नेपालभित्र प्रचलनमा रहेका जति पनि संवत्हरू हामी देख्छौं, नेपाल संवत्ले ती संवत्हरूभन्दा भिन्न इतिहास र भावना बोकेको पाउँछौं । नेपाल संवत् जति जनस्तरमा व्याप्त छ, चर्चित छ र राष्ट्रिय संस्कतिसँग अभिन्न रूपमा गाँसिएको छ, अरु संवत् त्यस्तो देखिँदैन ।

नेपाल संवत नेपालको चाडपर्व लगायत जन्मदेखि मृत्युसम्मका सम्पूणे संस्कारहरूको मुख्य आधार हो । यस संवत्मा तिथिमितिदेखि यावत् कुराहरू व्यवस्थित छन् । कतिपय यस्ता संवत्को चर्चा पनि हुने गर्छ, जसको वर्ष गणना भएपनि तिथिमिति देखिँदैन । बुद्ध संवत, यले संवत् यसका उदाहरण हुन् । यसमा तिथिमिति देखिँदैन । नेपाल संवत् नै एक मात्र यस्तो संवत् हो जुन जनस्तरमा आजपर्यन्त सर्वस्वीकार्य भई प्रचलनमा रहिआएको छ ।

इतिहास केलाएर हेर्दा वि.सं. १८२५ (नेपाल संवत ८८८) मा गोरखाका राजा पृथ्वीनारायण शाहले आफ्नो राज्य विस्तार गरी तत्कालिन नेपालमण्डल, जसभित्र कान्तिपुर, ललितपुर, भक्तपुर र द्वाल्खा चारवटा स्वायत्त राज्य थिए, त्यसमध्ये कान्तिपुर विजयपश्चात क्रमश: अरु राज्यहरू पनि आफ्नो नियन्त्रणमा लिए । लिच्छबी कालमा नेपाल उपत्यका र वरीपरीको भूभागलाई नेपालमण्डलको नामले पुकारिन्थ्यो । नेपालमण्डल शब्दको प्रयोग नेपालमा तत्कालिन दक्षिण एसियामा प्रचलित महाजनपद राज्यहरूजस्तै सङ्घीय नेपाल भन्ने अर्थमा प्रयोग भएको देखिन्छ । त्यतिबेला नेपालमण्डल पाँचवटा राज्यहरूको सङ्घराज्य थियो । तत्कालीन कान्तिपुर, ललितपुर, भक्तपुर, बनेपा र द्वाल्खा विभिन्न कालखण्डमा अस्तित्वमा आए र यसको संघीय स्वरूप नेपालमण्डल थियो । बनेपा राज्य भक्तपुरमा गाँभिएपछि त्यो चारवटा राज्यको सङ्घ थियो । नेपाल संवत नेपालमण्डलभरि प्रयोगमा थियो । गोर्खा राज्य विस्तारको माध्यमबाट आजको आधुनिक नेपालको स्थापना गरेपछि नेपाल सवत्लाई हटाएर शक संवत् प्रयोगमा ल्याउने काम भयो ।

नेपालमा शक संवत दुईपटक प्रयोगमा आए । पहिलो पटक लिच्छवि कालमा शक संवत् प्रयोग भयो, पछि फेरि शक संवत हटेर मानदेव संवत् र त्यसपछि नेपाल संवत् प्रयोगमा ल्याइएको देखिन्छ । दोस्रोपटक वर्तमान आधुनिक नेपाल निर्माणपश्चात पृथ्वी नारायण शाहले पुन: शक संवत प्रयोगमा ल्यायो । वर्तमान भारतको स्थापनापूर्व त्यहाँ झन्डै ५६५ वटा रजौटा राज्यहरू थिए । त्यसमध्येका

बाँकी पेज ७ मा

# भाषा, संस्कृति, कला र सम्पदाहरु जोगाउने दायित्व सबैको – प्रम ओली

भक्तपुर । नेपाल संवत ११४५ को अवसरमा शनिवार शंखधर साख्वाः प्रतिष्ठानले मध्यपुर थिमि नगरपालिकाको सहकार्यमा शंखधर चोकमा आयोजना गरेको राष्ट्रिय विभूति शंखधर साख्वाःको प्रतिमामा माल्यार्पण कार्यक्रममा प्रधानमन्त्री ओलीले भाषा संस्कृति, सभ्यतालाई जोगाउने दायित्व सबैको भएको बताउँदैं व्यक्तिगत र प्रधानमन्त्री दुबै हैसियतमा आफू सधैं तत्पर रहने बताएका छन् ।

उनले नेपाल भाषालाई पाठ्यक्रममा समावेश गर्न सरकारले आवश्यक प्रक्रिया अगाडि बढाउने बताउँदैं प्रतिष्ठानका केही मागहरु जायज नै रहेको र राज्यको क्षमता अनुसार तिनलाई क्रमशः पुरा गर्दै जाने प्रतिवद्धता जनाए । प्रधानमन्त्री ओलीले भने, "नेपाल भाषालाई पाठ्यक्रममा ऐच्छिक विषयको रुपमा समावेश गर्ने माग पुरा गर्न नसकिने माग हो जस्तो लाग्दैन, अन्य मैथली, भोजपुरी भाषाजस्तै यसलाई पनि ऐच्छिक विषयको रुपमा पाठ्यक्रममा समावेश गर्न सकिन्छ ।" उनले नेपाल भाषाको संरक्षणका लागि बिभिन्न ढंगले प्रयास गरिरहेको बताउदै गत आश्विन ३० गते मात्रै सरकारले नेपाल भाषामा समाचार राසस, नेपाल टेलिभिजन, रेडियोबाट प्रशारण गरेर नयाँ सुरुवात गरेको बताए ।

भक्तपुरलाई जिवित सग्रहालयको रुपमा लिएको बताउदै प्रधामन्त्री ओलीले भने, "भक्तपुर एउटा जिउँदो संग्रहालय हो, यहाँका ऐतिहासिक कला, संस्कृति, सम्पदालगायतका यहाँका संस्कृतिलाई जिवित राख्ने र फैलाउनु पर्छ, त्यसमा तीन तहकै सरकारले काम गर्छ ।"

उनले जेलमा हुँदा नेपाल संवत, नेवारी बाद्यवाद्यन, नेवारी सभ्यता, संस्कृति कला साहित्य बारे बुझ्ने मौका पाएको चर्चा गर्दै यसमा आफ्नोपन, मौलिकता र बिशेषता रहेको बताए । कार्यक्रममा संस्कृति, पर्यटन तथा नागरिक उड्यान मन्त्री बद्रीप्रसाद पाण्डेले शंखधर साख्वाःले त्यतिबेलानै देशभक्ति र राष्ट्रियताको दर्शन, सत्कर्म, परोपरकारको दर्शन र लोकतान्त्रिक समाजवादीको दर्शन एवं सामाजिक न्याय र भातृत्व एकताको सन्देश दिएको बताए । सरकारका तीनवटै तहले राष्ट्रिय बिभूति शंखधर साख्वाको योगदानलाई देशभरी फैलाउन सरकार तत्परताका साथ लागिपर्ने प्रतिबद्धता व्यक्त गरे । कार्यक्रममा मध्यपुर थिमि नगरपालिकाका नगर प्रमुख सुरेन्द्र श्रेष्ठले नगरपालिकाले यहाँको ऐतिहासिक कला, संस्कृति, पहिचानलाइ विश्वभर फैलाउन नगरपालिकाले पुसमा मध्यपुर महोत्सव २०८१ को आयोजना गर्न लागेको जानकारी दिए । प्रतिष्ठानका अध्यक्ष ज्ञानराम श्रेष्ठले स्वागत मन्तव्य व्यक्त गरेको कार्यक्रममा प्रधानमन्त्रीले ओलीले साख्वाःको प्रतिमामा माल्यार्पण गर्नुका साथै शंखधर बुलेटिन र ल्यायम्हः पुचबाट प्रकाशित बुलेटिन पनि बिमोचन गरेको थियो ।

सोही अवसरमा प्रधानमन्त्री ओलीले मध्यपुर थिमिमा ६३ वर्ष पुरानो संस्था न्ह्यज्याः खलः थिमि र नेपाल भाषाका अभियन्ता, भाषा आयोगका सदस्य एवं सञ्चारकर्मी सुरेशकिरण मानन्धरलाई शंखधर सम्मान प्रदान गरेको थियो ।

## साङ्हाई नगरपालिकाका परामर्शदाता समितिका महानिर्देशक भक्तपुर भ्रमणमा

भक्तपुर नगरपालिकाको निमन्त्रणामा चीनको साङ्हाई नगरपालिकाको परामर्शदाता समितिका महानिर्देशक मो फुछुनको नेतृत्वमा नेपाल आएको चिनियाँ प्रतिनिधि मण्डललाई प्रमुख सुनिल प्रजापतिले भनपा सभाकक्षमा फूलको गुच्छा, खादा र भादगाउँले टोपी लगाई स्वागत गर्नुभयो ।

स्वागत कार्यक्रममा बोल्नुहुँदै प्रमुख प्रजापतिले भक्तपुर नगरपालिकाले शिक्षा, स्वास्थ्य, सरसफाइ, सम्पदा पुनःनिर्माणलगायतका गतिविधिहरुमा स्थानीय जनताको साथ र सहभागिता रहेको र नयाँ पुस्तलाई सीप हस्तान्तरण गरिरहेको बताउनुभयो ।

नेपाली जनता र चिनियाँ जनताबीचको सम्बन्ध इतिहास जतिकै पुरानो रहेको उल्लेख गर्दै उहाँले नेपाली जनताले चिनियाँ कम्युनिष्ट पार्टी र अध्यक्ष माओ त्से तुङबाट धेरै कुराहरु सिक्दैछन् भन्नुभयो ।

चिनियाँ साहित्यकार लु शुनको भनाइ "शोषितहरु शोषकका कि त दास बन्छन् कि त शत्रु हुन्छन् तर मित्र कहिल्यै बन्न सक्दैनन" स्मरण गर्दै प्रमुख प्रजापतिले काम गरी खाने जनताको पक्षमा संघर्ष गर्ने र जनताको इमान्दारीपूर्वक सेवा गर्ने नेपाल मजदुर किसान पार्टीको स्पष्ट दृष्टिकोण अनुसार नै भक्तपुर नगरपालिकाका जनप्रतिनिधिहरुले कार्य गरिरहेको प्रष्ट पार्नुभयो ।

भेटमा साङ्हाई नगरपालिकाको परामर्शदाता समितिका महानिर्देशक मो फुछुनले आफूहरु भक्तपुरको औपचारिक भ्रमण गर्ने साङ्हाईको पहिलो टोली भएको उल्लेख गर्दै भक्तपुर नगरपालिकाको आतिथ्य सत्कार गर्ने शैलीबाट प्रभावित भएको बताउनुभयो ।

उहाँले साङ्हाई शहर चीनको प्रमख व्यापारिक केन्द्र भए पनि चिनियाँ राष्ट्रपति सि जिनपिङले साङ्हाई लाई जनताको शहर बनाउनुपर्ने र जनताको निम्ति जनताकै सहभागितामा निर्माण गरिनुपर्ने निर्देशन दिनभएको बताउनुभयो । उहाँले भक्तपुर नगरपालिका र साङ्हाई शहरबीच आर्थिक, शैक्षिक र पर्यटनको क्षेत्रमा सहकार्य गर्न सकिने सम्भावना औल्याउनुभयो । "भक्तपुरको हस्तकला उत्पादन साङ्हाई पुगोस् भन्ने चाहन्छौं" उहाँले भन्नुभयो ।

उहाँले चिनियाँ साहित्यकार लु शुन साङ्हाई नगरपालिका नजिकको चचियाङ्ग प्रान्तमा जन्मिनुभएको उल्लेख गर्दै उहाँले चिनियाँ जनतालाई विदेशीको परनिर्भरतामा नभई जनताको एकताले नै देश निर्माण गर्नुपर्नेमा जोड दिनुभएको स्मरण गर्नुभयो ।

चिनियाँ प्रतिनिधि मण्डलका अर्का सदस्य कु होङ्गहुईले यस वर्ष साङ्हाईमा सातौं विश्व आयात मेला हुन लागेको उल्लेख गर्दै गत वर्षको मेलामा ७ खर्ब ८४ अर्ब चिनियाँ रकम बराबरको ब्यापार भएको तथा यस वर्ष पनि विभिन्न देशका उत्पादनहरुको प्रदर्शनी हुने चर्चा गर्नुभयो ।

स्वागत कार्यक्रममा भनपाका उपप्रमुख रजनी जोशी, प्रमुख प्रशासकीय अधिकृत बसन्त भट्टराई, भनपा ९ का वडाध्यक्ष रविन्द्र ज्याख्व, भनपा ७ का वडाध्यक्ष उकेश कवां, कार्यपालिका सदस्य रोशन मैंया सुवाललगायतको उपस्थिति रहेको थियो ।

स्वागत कार्यक्रम अघि महानिर्देशक फुछुन सहित छ जनाको टोलीले भक्तपुरको दरबार, टौमढी र तालाक्व क्षेत्रको अवलोकन गरेको थियो ।



## नेपालका माउन्टेन लिडरलाई अन्तर्राष्ट्रिय मान्यता

काठमाडौं । नेपाल माउन्टेन लिडर एसोसिएसनका अध्यक्ष दावा टसी शेर्पा र उनको टोलीले नेपालका माउन्टेन लिडरलाई अन्तर ाष्ट्रिय मान्यता दिलाउँदै नेपालको पर्वतारोहण तथा पदयात्रा क्षेत्रलाई विश्वसामु चिनाउने महत्वपूर्ण उपलब्धि हासिल गरेको बताएका छन् ।

अध्यक्ष दावा टसी शेर्पाका अनुसार नेपाल पर्वतारोहण संघले विभिन्न चरणमा सन्चालन गर्दै आईरहेको माउन्टेन लिडर तालिमलाई अन्तर्राष्ट्रिय स्तरमा मान्यता दिलाउनको लागि नेपाल पर्वतिय लिडर संघले २०१६ मा Union of International Mountain Leader Associations (UIMLA) मा सदस्यताको लागि निवेदन पेस गरेको थियो । पछि Union of International Mountain Leader Associations को बार्षिक साधारण सभाले २०१७ मा नेपाललाई Candidate सदस्यता घोषणा गरी थप कार्य अगाडि बढाउन २०१९ मा Union of International Mountain Leader Associations को बार्षिक साधारण सभा यूरोपको रोमानियामा तालिम संबन्धी प्रस्तुतिको लागि निमन्त्रण दिए लगत्तै नेपाल पर्वतिय लिडर संघका अध्यक्ष केशर श्रेष्ठ र संघका महासचिव दावा टसी शेर्पाले उक्त साधारण सभामा नेपालको तालिम सम्बन्धि प्रस्तुति दिएर २०१९ मा Union of International Mountain Leader Associations को वर्षिक साधारण सभाले नेपाललाई Aspirant सदस्यता प्रदान गरेको थियो ।

Union of International Mountain Leader Associations को नियम अनुसार Aspirant सदस्य लिइसकेको देशहरूले तालिमको स्तर मुल्ङकनका गर्न तालिम सञ्चालनको दौरानमा फरक फरक देशबाट Union of International Mountain Leader Associations को प्रतिनिधि बोलाई तालिमको स्तर निर्धारण गरेपछि मात्र उक्त संस्थाको पुर्ण सदस्य प्राप्त हुन्छ ।

नेपाल पर्वतारोहण संघले सन्चालन गरेको तालिमलाई विभिन्न चरणमा गरेको मूल्याङ्कन प्रतिवेदन र अध्यक्ष दावा टसी शेर्पाले दिएको प्रस्तुतिलाई एकमुस्ट मुल्याङ्कन गरि Union of International Mountain Leader Associations को साधारण सभा यूरोपको मेसोडोनियमा नोभेम्बर २ मा यूरोपको २५ देशबाट भोट दिई बहुमत द्वारा नेपाललाई पुर्ण सदस्य देशहरु घोषित गरेको हो ।

शेर्पाका अनुसार, 'यस मान्यताले नेपालका पदयात्रा र पर्वतारोहण गतिविधिलाई विश्वसनीय, सुरक्षित र व्यावसायिक बनाउने दिशामा ठोस प्रभाव पार्नेछ । यसले नेपालको पर्यटन क्षेत्रमा सकारात्मक सन्देश पुर्याउँछ र अन्तर्राष्ट्रिय स्तरमा नेपालको छवि अझ उजिल्याउने छ ।'

उक्त उपलब्धिले नेपालमा पदयात्रा र पर्वतारोहण गर्न चाहने विदेशी पर्यटकलाई थप उत्साहित गराउनुका साथै पर्यटन उद्योगलाई थप सबल बनाउने विश्वास गरिएको छ। दावा टसी शेर्पाको नेतृत्वमा, नेपालका माउन्टेन लिडरहरूले साहसी यात्रुहरूको लागि सुरक्षित र जीवन्त अनुभव सुनिश्चित गर्दै नेपालको पर्यटनलाई विश्वमै छुट्टै पहिचान बनाउन सफल भएका छन् ।

यसले नेपालको अर्थतन्त्र र स्थानीय रोजगारमा पनि सकारात्मक प्रभाव पार्ने अपेक्षा गरिएको छ, किनभने सुरक्षित र व्यवस्थित

## युक्रेनी फौजको आक्रमणमा उत्तर कोरियाली सैनिकहरु

काठमाडौं - रूसलाई युक्रेनसँगको युद्धमा सहयोग गर्न हालै तैनाथ गरिएका उत्तर कोरियाली सैनिकहरू युक्रेनी आक्रमणमा परेको किएभका एक अधिकारीले मङ्गलबार बताएका छन् । कुनै युक्रेनी अधिकारीले प्योङयाङका एकाइहरूमाथि आक्रमण भएको बताएको यो पहिलो पटक हो । यो तैनाथीले युद्धको एक हजार दिनको माइलस्टोन नजिकिँदै गर्दा युद्धलाई नयाँ स्वरूप दिएको छ ।

"पहिलो उत्तर कोरियाली सैनिकहरूमाथि कुर्स्क क्षेत्रमा गोलाबारी गरिएको छ", युक्रेनको सुरक्षा परिषद्को दुष्प्रचार विरोधी शाखाका प्रमुख आन्द्री कोभालेन्कोले टेलिग्राममा लेखे । उनले थप विवरण दिएनन् । उत्तर कोरियाली सैनिकहरूलाई रूसको कुर्स्क सीमा क्षेत्रमा पठाइने पश्चिमी सरकारहरूले अपेक्षा गरेका थिए । त्यहाँ युक्रेनी सेनाको तीन महिने घुसपैठ दोस्रो विश्वयुद्धपछि रूसी भूमिको पहिलो कब्जा हो र यसले क्रेमलिनलाई लज्जित बनाएको छ ।

अमेरिकी, दक्षिण कोरियाली र युक्रेनी गुप्तचर मूल्याङ्कनका अनुसार मस्कोसँगको सम्झौताअन्तर्गत प्योङयाङले १२ हजारसम्म उत्तर कोरियाली लडाकू सैनिक युद्धमा पठाउँदैछ । लडाइँको गुणस्तर र युद्ध अनुभव अज्ञात रहेका उत्तर कोरियाली सैनिकहरू युद्धक्षेत्रमा युक्रेनको बिग्रँदो स्थितिमा थप भइरहेका छन् ।

# कसरी छानिन्छन् संसारकै शक्तिशाली व्यक्ति ?



काठमाडौं- संसारकै शक्तिशाली व्यक्तिको रुपमा चिनिने अमेरिकी राष्ट्रपतिको निर्वाचन सम्पन्न हुँदैछ। यसको नतिजा आज ६ नोभेम्बरमा आउनेछ।

योसँगै संसारका शक्तिशाली व्यक्तिको टुंगो लाग्नेछ । संसारकै शक्तिशाली यस अर्थमा, संयुक्त राष्ट्रसंघका अनुसार १९५ देश विश्वमा छन् । जसमा १९३ देश राष्ट्रसंघका सदस्य छन् । यीमध्ये १८० देशले आफ्नो मुद्रा चलाउँछन्, त्यसैले यी सबै देशको रिजर्भ मुद्रा भनेको अमेरिकन डलर हो ।

यस हिसाबले अहिलेसम्मका लागि अमेरिकन डलर संसारकै सबैभन्दा ठूलो मुद्रा हो । अर्कातिर अमेरिका संसारकै सबैभन्दा ठूलो अर्थव्यवस्था भएको देश हो । अहिले उसलाई चीनले पछ्याइरहेको छ । अर्कातिर अमेरिकासँग संसारकै शक्तिशाली परमाणु बम पनि छ । अमेरिकाका विश्वभर सैनिक क्याम्प फैलिएका छन् । त्यहीकारण यस पदमा बस्ने व्यक्ति विश्वकै शक्तिशाली हुन्छन् ।

अमेरिकामा राष्ट्रपतिको चुनावमा करिब डेढ वर्षदेखि चल्ने एक लामो प्रक्रिया हो । अमेरिकामा राष्ट्रपतिका लागि डेमोक्रेटिक र रिपब्लिकन पार्टीबीच प्रतिस्पर्धा हुन्छ । अमेरिकाको नयाँ राष्ट्रपतिमा वर्तमान उपराष्ट्रपति कमला ह्यारिस डेमोक्रेटिक पार्टीबाट र पूर्वराष्ट्रपति डोनाल्ड ट्रम्प रिपब्लिकन पार्टीबाट चुनावी मैदानमा छन् ।

हुन त अमेरिकामा ग्रीन पार्टी र पिस एन्ड फ्रिडम पार्टी पनि छन् । तर यी नाम मात्रै हुन्, यिनको अमेरिकी राजनीतिमा कुनै प्रभाव छैन ।

कसरी छानिन्छन् उम्मेदवार ?

अमेरिकामा सबैभन्दा पहिले दुई दलले आफ्ना उम्मेदवार चुन्नु पर्छ । जसका लागि दुई चुनावी विधि छन् । पहिलो प्राइमरी र दोस्रो ककस निर्वाचन विधि ।

अमेरिकी राष्ट्रपतिका लागि एउटा पार्टीमा कयौं दाबेदार हुन्छन् । पार्टीले आफ्नो उम्मेदवार छान्न पहिले प्राइमरी चुनाव गराउँछन् । यो विधिमार्फत प्राय हरकेजसो राज्यमा चुनाव हुन्छ । केहीमा भोटिङ हुन्छ भने केहीमा डिबेट (बहस) बाट पनि उम्मेदवार चयनको प्रक्रिया चलाइन्छ ।

केही राज्यमा प्राइमरी चुनाव खुला हुन्छ । तर केहीमा पार्टीका सदस्यहरूबीच मात्रै मतदान गराइन्छ । पार्टीका सदस्यहरू मात्रै सहभागी हुने विधि जसलाई क्लोज प्राइमरी चुनाव पनि भनिन्छ ।

दोस्रो विधि भनेको ककस हो । जसमार्फत हुने चुनावमा पार्टीका सदस्यमात्रै तोकिएको सार्वजनिक स्थानमा भेला भएर मत हाल्छन् । पार्टीका सदस्यहरूले यस क्रममा आफूलाई मन परेको नेतालाई मत दिन्छन् । जसको पक्षमा धेरै मत जान्छ ऊ उम्मेदवार चुनिन्छ । कहीँ कहीँ चुनावमा नगएर सर्वसम्मत निर्णय पनि हुन्छ ।

यी दुवै प्रक्रिया राजनीतिक दलहरुले आन्तरिक रुपमा गर्छन् । यी आन्तरिक चुनावबाट उम्मेदवारहरूले पार्टीको समर्थन लिन्छन् ।

प्राइमरी र ककस चुनावी प्रक्रिया सकिएपछि 'नेशनल कन्भेन्सन प्राइमरी'मा लगिन्छ । माथिका दुवै विधि सकिएपछि दलहरूले 'नेशनल कन्भेन्सन' गर्छन् ।

जुन बहसका लागि पार्टीका सबै समर्थक र ठूला नेता पनि सहभागी हुन्छन् । जसमा पार्टीका प्रतिनिधि अर्थात् डेलिगेट्सको समर्थनका आधारमा आधिकारिक रुपमा आफ्नो उम्मेदवार घोषणा गरिन्छ ।

यस पटक रिपब्लिकन पार्टीले भिसकन्सिनमा नेशनल कनभेन्सन गरेको थियो । रिपब्लिकन पार्टीका देशभरबाट जम्मा डेलिगेट्स २४ सय २९ जना थिए । यस्तोमा राष्ट्रपतिको उम्मेदवार बन्न बहुमत अर्थात् १२१५ डेलिगेट्सको समर्थन चाहिएको थियो । यस्तोमा डोनाल्ड ट्रम्पले सजिलै बहुमत हाँसिल गरे ।

उता डेमोक्रेटिक्स पार्टीको कन्भेन्सन शिकागोमा गरिएको थियो । जसमा तीन हजार ९४९ जना डेलिगेट्स थिए । त्यहाँ बहुमतका लागि एक हजार ९७६ जनाको समर्थन चाहिन्थ्यो । यस्तोमा वर्तमान राष्ट्रपति जो बाइडेनलाई ३९ सय डेलिगेट्स अर्थात् करिब शतप्रतिशतको समर्थन मिलेको थियो । तर चुनावी प्रक्रियामा रिपब्लिकनमा डोनाल्ड ट्रम्पसँगको बहसमा पछि परेपछि स्वास्थ्यको कारण देखाउँदै बाइडेन दोस्रो पटकका लागि राष्ट्रपति पदको दौडबाट बाहिरिए ।

त्यसबेला आफ्नो समर्थन उनले उपराष्ट्रपति कमला ह्यारिसलाई दिए । तर उनले यसका लागि डेमोक्रेटिकका डेलिगेट्सको समर्थन पनि जुटाउनु परेको थियो ।

चुनावी प्रक्रिया 'इलेक्टोरल कलेज'

विश्व महाशक्ति अमेरिकामा जम्मा ५० वटा राज्य छन् । यिनमा ४८ राज्य एकअर्काको भूगोलसँग जोडिएका छन् । तर अलास्का र हवाई राज्य भने अमेरिकाको मुख्य भूमिबाट सयौं किलोमिटर बाहिर छन् ।

अलास्का अमेरिकी राजधानी वासिङ्टन डीसीबाट करिब ६ हजार किलोमिटर टाढा अवस्थित छ । यसलाई अमेरिकाले रुससँग किनेको थियो । यो रसियन मूख्य भूमिबाट नजिकको दूरीमा पनि छ ।

उता हवाई राज्य प्रशान्त महासागरको एक द्वीप हो । यो राजधानी वासिङ्टनबाट ३ हजार किलोमिटर टाढा समुद्रमाथि अवस्थित छ ।

अमेरिकाका यी ५० राज्यबाट दुई प्रकारका सदस्य चुनिएर अमेरिकी कंग्रेसमा जान्छन् । पहिलो सिनेट र दोस्रो हाउस अफ रिप्रिजेन्टेटिभ ।

सिनेटमा हरेक राज्यबाट दुईजना प्रतिनिधि चुनिन्छन्, चाहे राज्य साना हुन् या ठूला । सिनेटमा जानेको संख्या जम्मा १०० हुन्छ ।

हाउस अफ रिप्रिजेन्टेटिभको संख्या ४३५ छ । यसमा तीनजना प्रतिनिधि वासिङ्टनबाट चुनिन्छन्, यो राजधानी सहरबाट राज्यकै दर्जाअनुसार तीन प्रतिनिधि हाउस अफ रिप्रिजेन्टेटिभमा जान्छन् ।

यसरी सिनेट र हाउस अफ रिप्रिजेन्टेटिभका सदस्यको संख्या जोड्दा जम्मा ५३८ हुन आउँछ । यी दुवै सदनबाट अमेरिकाको राष्ट्रपति चुनिन बहुमत अर्थात् २७० मत ल्याउनु आवश्यक हुन्छ ।

अमेरिकाका सबै ५० राज्यमा जनसंख्यासहितका आधारमा हाउस अफ रिप्रिजेन्टेटिभ अर्थात् 'इलेक्टर्स'को संख्या निर्धारित गरिएको हुन्छ । उदाहरणका लागि जनसंख्यामा सबैभन्दा ठूलो अमेरिकी राज्य क्यालिफोर्निया हो । जसको जनसंख्या करिब ३ करोड ९३ लाख छ । यो राज्यबाट ५५ जना हाउस अफ रिप्रिजेन्टेटिभ अर्थात 'इलेक्टर्स' चुनिन्छन् ।

त्यसैगरी टेक्सासबाट ३९, फ्लोरिडाबाट ३८ र नर्थ डकोडा ३ जना चुनिन्छन्, यसरी ५० वटै राज्यबाट चुनिनेहरूलाई 'इलेक्टर्स' कलेज पनि भनिन्छ । यस व्यवस्थालाई सन् १७८७ मा अमेरिकी चुनाव प्रणालीमा जोडिएको थियो ।

यी 'इलेक्टर्स' खासमा अमेरिकी राष्ट्रपतिका प्रतिनिधिका रुपमा हुन्छन् । अमेरिकी जनताले यिनलाई चुनेर नयाँ राष्ट्रपति निर्वाचित गराउन पठाउँछन् ।

'विनर टेक अल'

अमेरिकी चुनावी प्रक्रियामा सबैभन्दा जटिल प्रक्रिया हो 'विनर टेक अल ।' यसले जुनसुकै बेला पनि राष्ट्रपतिको चुनावमा खेल बदलिदिन सक्छ । किनकि, अमेरिकी राष्ट्रपतिको चुनाव प्रत्यक्ष प्रणालीमा हुँदैन । नेपालमा सांसद चुनेपछि तिनीहरूबाट प्रधानमन्त्री चुने जस्तै प्रक्रिया अमेरिकी राष्ट्रपतिमा पनि लागू हुन्छ ।

अमेरिकी जनताले पहिले हरेक राज्यबाट आफ्ना 'इलेक्टर्स' चुन्छन् त्यसपछि ती 'इलेक्टर्स'ले राष्ट्रपति र उपराष्ट्रपति चयन गर्छन् ।

तर यसमा अझै खेल हुन्छ । यदि ३८ जना 'इलेक्टर्स'को कोटा रहेको राज्यमा कुनै दलले २० 'इलेक्टर्स' जित्यो भने सबै ३८ 'इलेक्टर्स' उक्त पार्टीको भएको मानिन्छ ।

यसमा हरेक राज्यबाट छानिएका जम्मा 'इलेक्टर्स'मध्ये बहुमत संख्या आफ्नो पक्षमा पार्ने दलले सबै 'इलेक्टर्स'आफ्नो पोल्टामा पार्छ । अर्को दलका लागि उक्त राज्यबाट 'इलेक्टर्स'संख्याको गणना हुँदैन ।

उदाहरणका लागि फ्लोरिडामा रहेका ३८ 'इलेक्टर्स'मा रिपब्लिकन पार्टीले आधाभन्दा बढी अर्थात् २० 'इलेक्टर्स' जित्यो भने ती सबै ३८ 'इलेक्टर्स' डोनाल्ड ट्रम्पको पक्षमा गनिन्छन् ।

यस्तोमा कमला ह्यारिसको पार्टीका 'इलेक्टर्स' उक्त राज्यबाट कोही पनि गनिँदैनन् । यही प्रावधानका कारण कयौँ पटक कम भोट पाउने पनि अमेरिकाको राष्ट्रपति भएका छन् । डोनाल्ड ट्रम्प सन् २०१६ मा राष्ट्रपति चुनिँदा पनि यस्तै भएको थियो । तर यो नियम अमेरिकाका ४८ राज्यमा मात्रै लागू हुन्छ ।

'इलेक्टर्स'ले चुन्छन् राष्ट्रपति

नोभेम्बर ५ मा हुने निर्वाचनको एक महिनापछि डिसेम्बरमा 'इलेक्टर्स'ले राष्ट्रपतिका लागि भोट हाल्छन् । यसको गणना अमेरिकी कंग्रेसले गर्छ । त्यसका लागि ५३८ 'इलेक्टर्स'बाट २७० 'इलेक्टोरल कलेज' दुईमध्ये एक उम्मेदवारले ल्याउनुपर्छ ।

त्यसपछि जनवरीमा अमेरिकाका दुवै सदनको बैठक बोलाएर विजेता घोषित गरिन्छ । साधारणतया जसले धेरै लोकप्रिय मत ल्याउँछ, त्यही नै राष्ट्रपति हुन्छ । तर अमेरिकाको चुनावमा कयौँ पटक लोकप्रिय मत कम ल्याउने व्यक्ति राष्ट्रपति पदमा पुगेका छन् ।

लोकप्रिय मत धेरै ल्याए पनि २७० इलेक्टोरल ल्याउन नसक्दा राष्ट्रपति नभएको उदाहरण छ । यसरी विजेता 'अलटेक नियम'मार्फत घोषित गरिन्छ ।

निर्णायक 'स्विङ स्टेट'

अमेरिकी निर्वाचनमा ४३ वटा राज्यको मत कसलाई कता जान्छ भन्ने करिब टुंगो भइसकेको छ । यी राज्यलाई निलो र रातोमा चित्रित गरेर दुई उम्मेदवारको मतको हिसाब किताब पनि अहिले भइरहेको छ ।

तर यी बाहेकका सात राज्यको मतले ट्रम्प र ह्यारिसको भविष्य निर्धारण गर्दैछन् । अहिले त्यहीकारण सबैको नजर अमेरिकाका सात स्विङ्ग राज्यमा टिकेको छ ।

यहाँ कमला ह्यारिस र डोनाल्ड ट्रम्पबीच कडा टक्कर चलिरहेको छ । यही कारण दुवै प्रत्यासी अहिले आफ्नो पूरा शक्ति यी राज्यमा लगाएका छन् ।

रिपब्लिकन र डेमोक्रेटिक पार्टीले सबैभन्दा शक्ति र मिहिनेत पेन्सिल्भेनिनियामा लगाएका छन् । यो राज्यमा जम्मा १९ इलेक्टोरल सिट छन् ।

यहाँ पछिल्लो २८ वर्षमा केवल एक पटक रिपब्लिकनलाई जित मिलेको छ । उता नार्थ क्यारोलिनाले डेमोक्रेटिक पार्टीको संकट बढाएको छ । अन्तिम पटक सन् २००८ मा डेमोक्रेट उम्मेदवारका रुपमा यहाँ बराक ओबामाले जित निकालेका थिए । त्यसपछिका तीन चुनावमा रिपब्लिकन पार्टीलाई जित मिलेको छ । स्विङ राज्यमा जित्ने नै यस पटक पनि राष्ट्रपतिको कुर्सीमा पुग्नेछन् ।

स्विङ स्टेटः भिस्कन्सिन, एरिजोना, नेभादा, नर्थ क्यारोलिना, जर्जिया, मिशगन र पेन्सिल्भेनिया

को बन्न पाउँछ राष्ट्रपति ?

अमेरिकाको राष्ट्रपति हुन मुख्य तीन शर्त निर्धारण गरिएका हुन्छन् ।

पहिलो, अमेरिकामा जन्मिएको हुनुपर्छ ।

दोस्रो, उमेर कम्तीमा पनि ३५ वर्ष हुनुपर्छ ।

तेस्रो, अमेरिकामा कम्तीमा १४ वर्षदेखि बसेको हुनुपर्छ ।

अमेरिकी राष्ट्रपति निर्वाचनमा मतदाता हुन पनि निश्चित शर्त तय गरिएको छ ।

पहिलो, अमेरिकाको नागरिक हुनुपर्छ ।

दोस्रो, उमेर १८ वर्षभन्दा माथि हुनुपर्छ

तेस्रो, जुन राज्यमा भोट दिने हो, त्यहाँ दर्ता भएको हुनुपर्छ ।

# को हुन् नेपालका पहिलो फोटोग्राफर ?

काठमाडौं । अहिलेको समयमा फोटोग्राफर बन्नका लागि महँगो क्यामेरा नै हुनपर्छ भन्ने हुँदैन । सीप जानेको व्यक्तिले सामान्य फोनबाटै स्तरीय फोटो खिच्न सक्छन् । सबैको हात हातमा फोटो खिच्न सकिने स्मार्ट फोन छन् । नेपालमा यसरी हात हातमा फोन पुगेको एक दशक बढी भइ सकेको छ ।

तर, नेपालको इतिहासमा फोटोग्राफीको सुरुवात कसले र कसरी गरेका होलान् ? आज हामी त्यसैबारे चर्चा गर्दैछौं:

नेपालमा फोटोग्राफीको विकास

नेपालको फोटोग्राफी इतिहासमा फोटो खिच्ने क्यामेराको प्रवेश गराउने राणा प्रधानमन्त्री जङ्गबहादुर राणा हुन् भनेर उल्लेख गरिएको पाइन्छ । सन् १८५० मा उनी युरोप भ्रमणमा गएको बेला फोटो खिच्ने क्यामेरा नेपालमा ल्याएको कुरा उल्लिखित छ ।

तर, उक्त क्यामेराबाट खिचिएको फोटो कुन हो भन्ने स्पष्ट छैन । किनभने त्यस क्यामेराबाट खिचिएको भनिएको फोटो प्रकाशमा आएको छैन । नेपालमा फोटो खिचेर प्रकाशनमा ल्याउने पहिलो व्यक्ति बेलायतका नागरिक क्लेरेन्स कोमिन टेलर थिए ।

उनी सन् १८६३ मा नेपाल भ्रमणमा आउँदा कान्तिपुर (हालको काठमाडौं), भक्तपुर र ललितपुरका दरबार परिसर, त्यहाँको जनजातिका फोटोलगायत जङ्गबहादुर राणाका परिवारको फोटो खिचेका थिए ।

नेपालको सन्दर्भमा पहिलो नेपाली फोटोग्राफरका रूपमा डम्बर शमशेर राणा (सन् १८५८-१९२२) लाई मानिन्छ । उनले सन् १८७० मा भारत हुँदै नेपाल भ्रमणमा आएका युरोपेली फोटोग्राफरहरू बोर्न र सेफर्डबाट फोटोग्राफी सिकेका थिए । डम्बर शमशेर धीर शमशेरका छोरा हुन् । बाबुले दिएको पैसाको सदुपयोग गरी डम्बर शमशेरले दरबारमा फोटो स्टुडियो निर्माण गरेका थिए । धीर शमशेर भने प्रधानमन्त्री वीर शमशेरका भाइ हुन् ।

डम्बर शमशेरको फोटोग्राफीको सोखलाई उनका छोरा शमर शमशेर (सन् १८८३-१९५८)ले पनि अङ्गालेका थिए । उनी नै नेपालको इतिहासका सबैभन्दा प्रभावशाली फोटोग्राफर मानिन्छन् । शमर शमशेरको फोटोग्राफी सम्बन्धी कामलाई उनका छोरा सुप्रसिद्ध नाटककार एवम् कलाकार बालकृष्ण समले पनि निरन्तरता दिएका थिए । अर्थात् बालकृष्ण शमका हजुरबा डम्बर शमशेर नै नेपालका पहिलो फोटोग्राफर मानिन्छन् ।

सन् १८७० सम्म सर्वसाधारण जनताले फोटो खिच्ने अवसर पाएका थिएनन् । पछि मात्र आएर डम्बर शमशेर र गेहेन्द्र शमशेर (वीर शमशेरका छोरा एवं नेपालको पहिलो वैज्ञानिक) को दयाले दरबार बाहिरका सर्वसाधारण व्यक्ति पूर्णमान चित्रकार (सन् १८६३-१९३९) ले फोटोग्राफी कला सिक्ने अवसर पाएका थिए ।

राणाहरूबाट नै प्रोत्साहन पाएर फोटोग्राफी सम्बन्धी तालिम हासिल गर्ने सन्दर्भमा उनी सन् १८८० मा कलकत्ता पुगेका थिए । त्यहाँ उनले बङ्गाली फोटोग्राफर नील मधवा दीनबाट सीप सिकेका थिए । कलकत्ताबाट फर्किएपछि उनले आफ्ना दाजु दीर्घमान चित्रकारलाई पनि फोटोग्राफी सिकाएका थिए । दीर्घमानलाई चन्द्र शमशेरले सिंहदरबारमा कला विभागमा जागिर समेत दिएका थिए । सन् १९०८ मा चन्द्र शमशेर युरोप भ्रमणमा जाँदा दीर्घमानले पनि जाने अवसर पाएका थिए । उनले युरोपबाट क्यामेरा र फोटोग्राफीका सामान पनि ल्याउने अवसर पाएका थिए । उनले काठमाडौं भीमसेनस्थान स्थित आफ्नै घरमा फोटोग्राफी स्टुडियो सञ्चालन गरेका थिए । उनले आफ्ना छोरा गणेशमान चित्रकारलाई पनि फोटोग्राफी सम्बन्धी तालिम दिएर यस विधामा व्यावसायिक रूपमा निरन्तरता दिन लगाएका थिए ।

रोयल फोटोग्राफरका रूपमा प्रसिद्धि पाएका गणेशमान चित्रकार पश्चात् उनका छोराहरू पुष्प चित्रकार र किरणमान चित्रकारले स्टुडियो सम्हालेका थिए । किरणमान चित्रकारले आफ्ना पूर्वजले थालेका फोटोग्राफी व्यवसायलाई हालसम्म पनि निरन्तरता दिई 'गणेश स्टुडियो' सञ्चालन गर्दै आएका छन् ।

पुष्प चित्रकार लामो समयसम्म पुरातत्व विभागमा वरिष्ठ फोटोग्राफरका रूपमा सेवारत रही हाल अवकाश जीवन बित(इरहेका छन् र किरण चित्रकार हाल नेपाल टेलिभिजनमा वरिष्ठ क्यामेराम्यानका रूपमा कार्यरत छन् । नेपालको फोटोग्राफीको इतिहासमा पहिलो व्यावसायिक फोटोग्राफरका रूपमा पूर्णमान र दीर्घमान बन्धुको नाम अङ्कित रहेको छ ।

# खल्तीभित्र रहेको फोनमा समेत सिग्नल

काठमाडौं । स्पष्ट रूपमा आकाश नदेखिएको अवस्थामा समेत स्पेसएक्सको आउँदै गरेको सेलुलर स्टारलिङ्क सेवाको सिग्नल प्राप्त गर्न सकिने भएको छ । खल्तीमा रहेको फोनमा समेत उक्त स्याटलाइट प्रविधिले सञ्चार गर्न सक्ने स्पेस एक्सको स्याटलाइट इन्जिनियरिङका वरिष्ठ निर्देशक बेन लङ्गमायरले बताएका हुन् ।

लङ्गमायर स्पेस एक्सको डाइरेक्ट-टु-सेल स्टारलिङ सेवाको परीक्षण गर्दै आएका छन्, जसले भित्र समेत काम गर्ने कुरा कम्पनीले यस अघि नै निश्चित गरिसकेको छ । आइतबार लङ्गमायरले एक्समा एक पोस्टमार्फत थप विवरण राख्दै भनेका छन्, "म मेरो अधिकांश परीक्षण भित्र तथा मेरो डिनर टेबलमा गरिरहेको हुन्छु, जुन झ्याल नजिकै छ ।"

"आकाशमा रहेको स्याटलाइटसँग सिधा नजरभन्दा बाहिर हुने गरी खल्तीमा रहेको अवस्थामा र टेस्ला गाडीभित्र समेत स्पेसएक्स डीटीएक्स (डाइरेक्ट टु सेले) काम गर्छ । जहाँसम्म मलाई लाग्छ कि मानव शरीरले सिग्नललाई थप कमजोर बनाउँछ ।"

यो विवरणबाट सेलुलर स्टारलिङ स्याटलाइटको सम्भावित क्षमताको थप झलक मिल्छ, जसले भ्वाइस कल र इन्टरनेट डाउनलोडको सुविधा दिनुभन्दा पहिला टेक्स्ट मेसेजलाई सपोर्ट गर्छ । नेटवर्कको पहुँच नरहेका स्थानमामा सेलुलर मोबाइल सेवा उपलब्ध गराउन दूरसञ्चार सेवा प्रदायकलाई सघाउने गरी स्पेसएक्सले प्रविधि विकास गरिरहेको छ, जुन प्रायः दुर्गम भूभागहरूमा उपलब्ध हुनेछ ।

सेलुलर स्टारलिङ्क सेवाको व्यावसायिक सञ्चालनका लागि कम्पनी एफसीसी (सङ्घीय सञ्चार आयोग) को अनुमतिको पर्खाईमा छ । हुरिक्यान आँधीबाट पीडितको सहयोगार्थ उक्त एजेन्सीले स्पेस एक्सलाई सेलुलर स्टारलिङ स्याटलाइटका लागि टेक्स मेसेजको इमर्जेन्सी अनुमति दिएको छ, टी-मोबाइलका सीईओका अनुसार यसमार्फत लाखौं मेसेज डेलिभर भइसकेका छन् ।

एउटा छुट्टै पोस्टमा लङ्गमायरले भनेका छन्, "२४ घण्टाभित्रै हुरिक्यान प्रभावित क्षेत्रमा इमर्जेन्सी एसएमएस सक्रिय पारिएको थियो ।" "मलाई लाग्छ भविष्यमा हामी त्यसलाई घटाएर दश मिनेटमै पृथ्वीको कुनै पनि ठाउँ (५८ डिग्री उत्तरदेखि ५८ डिग्री दक्षिण अल्टिच्युड) मा सेवा उपलब्ध गराउन सक्छौं," उनले अगाडि थपेका छन् ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### भ्रष्टाचार र दण्डहीनताविरुद्ध शुद्धीकरण अभियान

देशमा भ्रष्टाचार र दण्डहीनताले प्रश्रय पाइहेको विषय दलका शिर्षस्थ नेताहरु देखि आम जनसमुदायसम्म चिन्तित बनिरहेको छ । तर देशमा मौलाउँदै गएको यस प्रकारको बेथितिका विरुद्ध भने कही कतैबाट ठोस निकासको पहल हुने गरेको देखिदैन । राजनीतिक दल र तिनका नेताहरु सत्ताबाट बाहिर प्रतिपक्षमा रहँदा देख्ने बेथिति सत्ता प्रीति हुनासाथ भने देशमा सुशासन नै देख्ने गर्दछ । यही नै बर्तमानमा नेपालको लागि विडम्वना बन्ने गरेको छ ।

अहिले देशमा सहकारीको रकम अपचलन गरेको अभियोगमा दलकै प्रभावशाली नेताहरुको संलग्नताले देशमा भ्रष्टाचार, बेथिति बढीरहेको देखाउँछ । तर सरकारी निकाय यो विषयमा मौन रहने गरेको छ । प्रहरी प्रशासन कारवाहीको लागि अनुसन्धानमा केन्द्रीत रहेको छ भने सामाजिक सञ्जाल र संचार माध्यमहरुमा राजनीतिक दल र तिनका नेताहरु प्रति आम जनसमुदायमा रुष्ट रहेको देखिन्छ । तर पनि राजनीतिक दल, तिनका नेताहरु र सरकारी संयन्त्रमा रहेका सरोकारवालाहरुसमेत देशमा मौलाउँदै गएको विकृति र विसंगति हटाउने कार्यमा कुनै ठोस कदम चाल्न सकेको देखिदैन । अर्थात् ती देशमा देखिएको समस्या निराकरणले आफै फस्ने डरले पनि सरोकारवाला निकाय मौन रहेको आम जनसमुदायको आंकलन छ ।

यही व्यवहारवादले प्रमुखता पाएपछि राजनीतिमा पनि सिद्धान्तमात्र होइन आदर्शसमेत गौण हुनपुग्छ । तैपनि, औसत राजनीतिकर्मीले समेत प्रायः नैतिकताको ख्याल राख्नेगरेको देखिँदै आएको छ । नेपालको राजनीतिमा भने सिद्धान्तसँगै 'नैतिकता' पनि गौण बन्न गएको देखियो । राजनीतिक दलका नेतालाई जसरी सजिलो हुन्छ कानुन, नियम र नैतिकताको अर्थ त्यस्तै लगाउने गर्छन् ।

अहिले संसद्का दुई प्रमुख दल नेपाली कांग्रेस र नेकपा (एमाले)ले सत्ता साझेदारी गरेका छन् । यतिबेला कांग्रेस र एमालेका शीर्ष नेताले चाहने हो नेपालको राजनीतिलाई अपवित्र व्यवहारवादबाट मुक्त बनाउन सक्छन् । यथार्थमा संसद्लगायत राजनीतिक जीवनमा व्याप्त भ्रष्टाचार, मर्यादाहीनता तथा अस्वस्थ प्रवृत्ति समाप्त पार्न यो अत्यन्त उपयुक्त समय पनि हो । बलियो सरकार भएका बेला राजनीतिक भ्रष्टाचार र विकृति, विसंगतिविरुद्ध शुद्धीकरण अभियान चलाउन सके नेपालको लोकतन्त्र नै परिष्कृत र परिपक्व हुनेछ ।

यसका लागि राजनीतिक अठोट गरी नैतिक विवादमा परेका सबैलाई आआफ्नो पदबाट राजीनामा गराएर संसद् शुद्धीकरण अभियान चलाउनुपर्छ । जनप्रतिनिधिहरूबाट सुरु गरिने शुद्धीकरण अभियानले समाजका सबै अङ्ग र क्षेत्रलाई स्वच्छ बनाउन सक्छ ।

नेपाली कांग्रेसका केन्द्रीय उपसभापति धनराज गुरुङ पनि अहिले सहकारी ठगीको विवादमा मुछिएका छन् । यद्यपि, उनले सहकारी ठगीमा आफ्नो संलग्नताको संसदीय छानबिन गर्ने प्रस्ताव पनि राखेका छन् । स्मरणीय छ यस्तै मामिलामा तत्कालीन गृहमन्त्री तथा राष्ट्रिय स्वतन्त्रता पार्टीको अध्यक्ष रवि लामिछानेविरुद्ध छानबिन समिति बनाउन कैयौं दिन संसद् नै अवरुद्ध नै भएको थियो ।

संसदीय मर्यादाको चिन्ता नै छ भने धनराज गुरुङले पनि कम्तीमा पार्टीको उपसभापतिबाट राजीनामा गर्नु उचित हुनेछ । गुरुङको राजीनामाले राजनीतिमा नैतिक मर्यादाको स्थापना हुनेछ भने रवि लामिछानेमाथि पनि नैतिक दबाब पर्नेछ । नेपाललाई भ्रष्टाचार र दण्डहीनताको दलदलबाट मुक्त गर्ने हो जनप्रतिनिधिहरूबाटै शुद्धीकरण अभियान सुरु गरियोस् । त्यसपछि देखिने नैतिक राजनीतिको स्वच्छ अभ्यासले नेपालमा लोकतन्त्र चरितार्थ हुनेछ ।

# कसले लेख्ने सीमान्तकृतको इतिहास ?

● राजकुमार दिक्पाल

'छोइछिटो हाल्नु पर्ने अछूत' र 'छोइछिटो हाल्नु नपर्ने अछूत' भनी कानुनी रुपमा तोकेरै छुवाछूतलाई मुलुकी ऐनले मान्यता दियो भने 'मासिन्या मतुवाली' र ' नमासिन्या मतुवाली' भनेर समुदायमा अर्को विभेदको पर्खाल पनि मुलुकी ऐनले नै खडा

सामाजिक र भौगोलिक विविधताले नेपालको सौन्दर्य भरिपूर्ण छ तर यहीँ विविधताभित्र अनेकौं असमानता पनि छन् । ती असमानतालाई विभिन्न कोणबाट निरुपण गर्न प्राज्ञिक माध्यमबाट पनि प्रयास थाल्नुपर्ने ठूलो आवश्यकता छ । विकास र शान्तिका लागि सामाजिक असमानता ठूलो बाधक हो ।

समतामूलक समाज निर्माणका लागि विगतमा भएका कमजोरीको इतिहास बटुलेर त्यसलाई निफल्न जरुरी छ । विगतमा राज्यबाटै ऐन निर्माणका क्रमबाट भएका कमीकमजोरीले कतिपय जातिगत र सामाजिक समूह अहिले पनि सीमान्तकृत अवस्थामा गुज्रिएका छन् । त्यसैले सीमान्तकृतको छुट्टै इतिहास लेखनको क्षेत्रले पनि यथोचित प्रोत्साहन पाउन सकेन । नेपालको इतिहास भनेकै राजा महाराजाको गाथा हो भन्ने धारणालाई चिर्न पनि अब सीमान्तकृतको इतिहास लेखनले उचित वातावरणको खोजी गरिरहेको यस प्रसङ्गमा स्मरणीय छ ।

नेपालको इतिहास लेखन

तत्कालीन ईष्ट इन्डिया कम्पनीका कर्णेल विलियम कर्कप्याट्रिकले सन् १८११ (विसं १८६८) मा प्रकाशित गरेको ' एन एकाउन्ट अफ द किङडम अफ नेपाउल' नेपालका बारेमा लेखिएको पहिलो इतिहासको पुस्तक हो । उनी १८४९ सालमा नेपाल आएका थिए । एक महिना जति नेपाल बस्दा उनले जे जति टिपोट गर्न भ्याए, त्यसैलाई उनले पुस्तकका रुपमा प्रकाशित गरे । त्यसको आठ वर्षपछि फ्रान्सिस ह्यामिल्टनले 'एक एकाउन्ट अफ द किङडम अफ नेपाल' (सन् १८१९) प्रकाशित गरे । नेपालको इतिहास लेखिएको यो दोस्रो पुस्तक हो ।

नेपालमा इस्ट इन्डिया कम्पनीको रेजिडेन्स खुलेपछि ह्यामिल्टन एक चिकित्सकका रुपमा नेपाल आएका थिए । त्यही मौकामा उनले नेपालको इतिहास बटुलेर पुस्तकको आकार दिए । विदेशी लेखकले नेपालको इतिहास प्रकाशित गरेको एक सय तीन वर्षपछि १९६९ सालमा बल्ल एक नेपाली लेखक अम्बिकाप्रसाद उपाध्ययले 'नेपालको इतिहास' प्रकाशित गरे । भारतमा रहेर कानुनविद्का रुपमा काम गरिरहेको बेला उनले यो पुस्तक प्रकाशित गर्दा चन्द्रशमशेरले नेपालको शासन चलाइरहेका थिए । 'नेपाल देशका अधिपति', 'विष्णुको अंश' आदि विशेषणका साथ चन्द्रशमशेरलाई नै समर्पण गरिएको यो पुस्तक राणाहरुको प्रशंसाले भरिएको छ ।

राणाकालजस्तो त्यो अन्धकार युगमा पुस्तक प्रकाशित गर्नु एक जोखिमपूर्ण काम थियो । त्यस्तो जोखिमपूर्ण समयमा प्रा तोत्रराज पाण्डे र पं नयराज पन्त मिलेर २००४ साल 'नेपालको सङ्क्षिप्त इतिहास'को प्रकाशन भयो । त्यहीँ बेला भारतमा आएको नवज(ागरणले त्यहाँ रहेका नेपालीलाई पनि प्रभाव पारेको थियो । त्यसैबेला दार्जिलिङमा सूर्यविक्रम ज्ञवालीले द्रव्य शाह र पृथ्वीनारायण शाहको इतिहास लेखेका ज्ञवालीले ' भानुभक्तको जीवनी', 'अमर सिंह थापा', 'वीर बलभद्र' जस्ता इतिहास पनि लेखे । भानुभक्त आचार्य, अमरसिंह थापा, बलभद्र कुँवरहरु कुनै राजा महाराजा होइनन् । भुईंबाट उठेर देशको सेवा गर्ने यी व्यक्तित्वहरुको इतिहासको लेखनले त्यसबेलै इतिहास राजा महाराजाहरुको मात्रै हुँदैनन् भन्ने मान्यता स्थापित हुन पुगेको थियो । राणाशासनकै समयमा सिक्किमको गान्तोकमा रहेर इमानसिंह चेम्जोङले 'किरात इतिहास' लेखेर इतिहास लेखनको क्षेत्रमा अर्को आयाम थपे । उनले जातिगत र सामाजिक समूहको पनि छुट्टै इतिहास लेख्न सकिन्छ भन्ने अवधारणा त्यसबेलै प्रस्तुत गरेका थिए तर त्यसपछि लेखिएका इतिहासहरु राजा महाराजाकै सेरोफेरोबाट खासै मुक्त हुन सकेको देखिँदैन ।

सीमान्तकृत समूह

राजा जयस्थिति मल्लको थितिलाई नेपालको प्रारम्भिक कानुनको प्रारुप मानिएको छ । विसं १९१० मा जङ्गबहादुरले बनाएको मुलुकी ऐन नै नेपालको पहिलो लिखित कानुन हो । यो ऐनले नेपालका जाति र सामाजिक समूहलाई विभेदयुक्त ढङ्गले विभाजित गरेर एउटै अपराधमा जातिअनुसार कसैलाई धेरै र कसैलाई कम सजाय दिने व्यवस्था गऱ्यो ।

'छोइछिटो हाल्नु पर्ने अछूत' र 'छोइछिटो हाल्नु नपर्ने अछूत' भनी कानुनी रुपमा तोकेरै छुवाछूतलाई मुलुकी ऐनले मान्यता दियो भने 'मासिन्या मतुवाली' र ' नमासिन्या मतुवाली' भनेर समुदायमा अर्को विभेदको पर्खाल पनि मुलुकी ऐनले नै खडा गऱ्यो । आज यिनै जाति तथा समुदाय सीमान्तकृत अवस्थामा छन् । विगतमा गरिएका यस्ता कमीकमजोरीले कतिपय जाति तथा समुदाय सीमान्तकृत अवस्थामा छन् । उनीहरु आर्थिक, सामाजिक, शैक्षिकजस्ता सबै क्षेत्रमा पछौटेपन र अवसरविहीनताको सिकार बनेका छन् । उनीहरुको इतिहास पनि न्यायोचित ढङ्गले लेख्नु त कता हो कता, अग्रज इतिहासकारले यसप्रति गम्भीर भएर विचार गर्ने चेष्टासमेत गरेको पाइँदैन । त्यसैले पनि इतिहास भनेकै राजा महाराजाको गाथा भन्ने धारणा बलियो रुपमा स्थापित हुन पुगेको हो । यसले इतिहास विधालाई नै न्याय गरेको ठहर हुँदैन ।

इतिहासको स्रोत

लिखित दस्तावेज नै इतिहासको मूल स्रोत हो । इतिहास भनेको विगतको घटनाको प्रामाणिक लेखन र प्रस्तुति हो । विगतमा लेखिएर सुरक्षित रुपमा राखिएका दस्तावेजहरुका आधारमा प्रामाणिक इतिहास लेखिन्छ । यसैगरी, सम्बन्धित घटनाका साक्षीले व्यक्त गरेको धारणाहरु पनि इतिहासका प्रमाणहरु हुन् ।

सीमान्तकृत समुदायको इतिहास लेखनको मूल समस्या भनेकै उनीहरुसँग सम्बन्धित लिखित दस्तावेजको अभाव हो । सीमान्तकृत समुदायमा अहिले पनि लेखन तथा दस्तावेजीकरणको अभाव छभने विगतमा लेखन र दस्तावेजीकरणको परम्परा नै थिएन । इतिहासको महत्वपूर्ण स्रोतका रुपमा रहेका शिलालेख, भोजपत्र, लालमोहर, इस्तिहार, मुद्रा आदि विगतमा राजा, मुख्तियार वा भारदारहरुबाट प्रसारित हुने गर्थे । यस्ता सामग्रीमा तत्कालीन समाजका कुलीन र अधिकारसम्पन्न वर्गका सवालले मूलरुपमा प्राथमिकता पाउने गर्दा पनि सीमान्तकृत समुदायको इतिहास लेखनमा समस्या आएको हो भन्ने निष्कर्ष निकाल्न सकिन्छ ।

नेपाली लेखकको कलमबाट इतिहास लेखनको परम्परा सुरु हुँदा सम्बन्धित लेखकले तत्कालीन समयका शासकको गुणगानका प्रशस्त कलमको मसी खर्च गरेको प्रसङ्ग माथि उल्लेख गरिसकिएको छ । नेपालमा राजतन्त्र सक्रिय रहँदासम्म पुराना ऐतिहासिक सामग्रीहरुको अध्ययनको पहुँच सहज पनि थिएन । यस्तो अहसज परिस्थितिमा राजदरबारको प्रतिकूल हुने गरी इतिहास लेख्नु जोखिमपूर्ण पनि थियो । त्यसैले नेपाली इतिहासकारहरुले सकेसम्म राजदरबारप्रति नरम भाषा प्रयोग गर्दै इतिहास लेख्दै जाँदा इतिहास भनेकै राजा महाराजाको गुणगान हो भन्ने प्रतीत हुन पुग्यो । यिनै कारणहरुले इतिहासकारहरुले सीमान्तकृतहरुको सवाललाई सीमान्तमा मात्र पारेनन्, यसप्रति उनीहरुको खासै ध्यानाकर्षण हुन सकेन । परिणाममा सीमान्तकृतहरुको इतिहास लेखिएन ।

हिजो सीमान्तकृतहरुको इतिहास लेखिएन भनेर अब लेखकहरुले कलम थन्क्याएर बस्न पनि भएन । सीमान्तकृतहरुको इतिहास लेखनको क्षेत्र व्यापक छ तर यसमा लेखन प्रयासहरु भने नगण्य छ । त्यसो त राजा महाराजाहरुबाट प्रसारित शिलालेख, लालमोहर, इस्तिहार, सनद आदिबाटै सीमान्तकृतहरुको ऐतिहासिक सवाल खोज्न नसकिने होइन । उदाहरणका लागि, तत्कालीन श्री ३ महाराज तथा प्रधानमन्त्री भीमशमशेरले १९८९ भदौ ६ मा जारी गरेको इस्तिहारलाई लिन सकिन्छ । यो इस्तिहारमा विगतमा तामाङ लेख्न नपाइने अवस्था रहेकामा अबदेखि भोटे नभनी तामाङ भनी लेख्ने बोलाउने गर्नू भन्ने उल्लेख छ । यसबाट विगतमा तामाङहरुले भोग्न परेको जातीय पहिचानकै इतिहासलाई खोतलखातल गर्न ठूलो सहयोग मिल्छ ।

यस्तै १८८८ कात्तिक सुदी १४ मा तत्कालीन राजाले दूधकोशी र बहादुरा खोला पूर्व र अरुण पश्चिम माझकिरातका तालुकदार हरुको नाममा जारी गरेको एक रुक्कामा राई, मझिया, किराती, मुर्मी आदिका प्रत्येक घरबाट हरेक वर्ष जनावरको छाला अनिवार्य सङ्कलन गरी सरकारले सञ्चालन गरेको मेगेजिन अड्डामा दाखिल गर्न आदेश दिइएको छ । जनावरको छाला बुझाउन नसक्ने प्रत्येक घरबाट हरेक वर्ष दुई-दुई आनाको दरले दस्तुर उठाउन उल्लेख गरेकामा कामी र सार्कीको घरबाट आठ-आठ आना दस्तुर उठाउन आदेश दिइएको छ । यो आदेशबाट अहिले पनि दलित उत्पीडित अवस्थामा रहेका कामी र सार्कीहरुलाई राज्यबाट कस्तो आर्थिक उत्पीडन र शोषण परेको थियो भन्ने इतिहासको खोजी गर्न ठूलो सहयोग मिल्छ ।

कसले लेख्ने इतिहास ?

इतिहास अनुसन्धानमा हात बसिसकेका इतिहासकार हरुले सीमान्तकृतहरुको इतिहास लेखी दिए अत्युत्तम हुने थियो । अझ इतिहास लेखनमा नाम चलेका र स्थापित इतिहासकारहरुले नै सीमान्तकृतहरुको इतिहास लेखिदिए त उनीहरुको नामसँगै सीमान्तकृतहरुको ऐतिहासिक सवालहरु सहज रुपमा स्थापित हुने थियो तर स्थापित इतिहासकार हरुले सीमान्तकृतहरुको इतिहासलाई आजसम्म त्यति महत्व दिएनन् । त्यसैले अब सीमान्तकृतहरु आफैं आफ्नो इतिहास लेखनका लागि तयार हुनु नै एक उत्तम विकल्प हुन सक्छ । गौतम बुद्धको भनाइ छ, 'अप्पो दीपो भव:' अर्थात् आफ्नो दीपक आफैं बन । आफ्नो इतिहासप्रति चिन्ता हुनेहरुले आफ्नो इतिहासको अन्वेषण र लेखन आफैं गर्न तत्पर हुनुपर्छ । अरूको भर परेर हुँदैन । (लेखक इतिहास अध्ययनमा रुचि राख्ने पत्रकार हुन् ।) संचारकर्मीबाट

# एमसीसी प्रसारण लाइन र टावर राख्ने जग्गाको मुआव्जा निर्धारणमा स्थानीय पदाधिकारीको दवाव



डोल्मा शेर्पा

संयुक्त राज्य अमेरिकाको सहयोगमा सञ्चालित मिलेनियम च्यालेन्ज कर्पोरेसन (एमसीसी) परियोजनाअन्तर्गत नुवाकोट जिल्लाको शिवपुरी गाउँपालिकामा प्रभावित नागरिकको माग तथा गुनासो सुनुवाइ नै नगरी एमसीसी प्रसारण लाइन र टावर राख्ने जग्गाको नापजाँच गरिएकोमा स्थानीयले आश्चर्य प्रकट गरेका छन् ।

एमसीसी कार्यन्वयन गर्ने नेपाल सरकारको निकाय एमसिए नेपालले काठमाडौ जिल्ला बाहेक नौ जिल्लामा प्रसारण लाइन र टावर राख्ने जग्गा प्राप्तीका लागि सबै प्रक्रिया समाप्त भएको दावी गरिरहँदा नुवाकोट शिवपुरी गाउँपालिकाका पदाधिकारी तथा प्रभावितहरुले आफनो गुनासो सुनुवाई नै नगरेको आरोप लगाएका छन् ।

'मेरो जग्गा पास गर्न मालपोत जाँदा रोक्का रहेको थाहा पाएँ, यस अघि एमसीसीको टावर मेरो जग्गामा पर्छ भन्ने कुनै सूचना थिएन ।' शिवपुरी गाउँपालिका वडा नम्बर ३की कार्यपालिका सदस्य सावित्री रिजालले भन्नु भयो- 'जग्गा रोक्का भएको एक बर्ष वितिसक्दा पनि यसको मुआव्जा तथा क्षतिपुर्तीको कुनै कुरा गरेका छैनन् । एमसीएको मान्छेहरु आफै यस्को प्रक्रिया कहिले सकिन्छ भन्नेमा स्पष्ट देखिदैन ।'

प्रसारण लाइनको ३१५ किलोमिटिर भित्र शिवपुरी गाउँपालिकामा मात्र ४१ वटा टावर राखिने योजना रहेको छ । शिवपुरीको वडा नम्बर १,२,५,७ र ८ मध्ये सबै भन्दा धेरै वडानम्बर ५ मा १४ वटा टावर राखिने छ । काठमाडौ शंखरापुर नगरपालिकाको वडानम्वर ३ लप्सीफेदी हुँदै सिन्धुपाल्चोकको मेलम्ची नगरपालिकाको १-४बाट शिवपुरी नागार्जुन राष्ट्रिय निकुञ्ज क्षेत्रबाट नुवाकोटको शिवपुरी गाउँपालिकाबाट रातामाटे सवस्टेशन तर्फ तानिने प्रसारण लाइनले निजी जग्गा र सामुदायिक बनहरु प्रत्यक्ष प्रभावित हुनेछन् ।

स्थानीय प्रभावितहरुले एकतर्फी रुपमा जग्गा अधिग्रहण भन्दा पनि कव्जा गरिएको आरोप लगाएका छन् । अहिले त्यस क्षेत्रमा प्रसारण लाइनको टावर राख्ने स्थान र कटानमा पर्ने रुख पहिचान गर्न नापजाँच सहित रुखहरुमा संकेत राखिने कार्य भइरहेको छ ।

स्थानीय पदाधिकारीहरुको अडान

नुवाकोट शिवपुरी गाउँपालिकाका पदाधिकारीहरुले अधिग्रहण गर्न लागिएको जग्गाको न्यायोचित मूल्य निर्धारण हुनु पर्ने अडान राख्नु भएको छ । गाउँपालिकाका अध्यक्ष गोविन्दप्रसाद थपलियाले परियोजनाले टावर राखिने जग्गाको मुआव्जा तथा क्षतिपुर्ती दिने भनिएता पनि तारमुनिका जमिनका बारेमा केही नबोलिएकोमा आपत्ती प्रकट गर्नू भएको छ । प्रसारण लाइनमा परेका जग्गाधनीहरुसँग कुनै परामर्श नै नगरी जग्गाको सर्वेक्षण र नापजाँच भइरहेकोमा पनि उहाँले असहमति प्रकट गर्नु भएको छ । तारमुनी ४६ मिटर चौडाको भोगाधिकारमा एमसीए नेपालले कुनै पनि प्रकारको संरचना बनाउन नपाउने नीति बनाएको छ ।

जग्गा अधिग्रहणका लागि प्रमूख जिल्ला अधिकारीको अध्यक्षतामा मुआव्जा निर्धारण समिति गठन हुने प्रक्रिया भए पनि एक बर्ष देखि नुवाकोटमा समितिको बैठक बस्न सकेको छैन । समितिमा स्थानीय तहका प्रमूख पदेन सदस्य रहने व्यबस्था छ । गाउँपालिकाका अध्यक्ष थपलिया गत बर्ष बसेको बैठकमा आफूले प्रभावितहरुलाई न्यायोचित मुआव्जा निर्धारण हुनु पर्ने माँग राखेको बताउनु भयो ।

उहाँले परियोजनाको सामाजिक उत्तरदायीत्वको बजेटबाट यहाँको सडकको स्तरोन्नत्ती, गुणस्तरीय विद्युत प्रबाहजस्ता बिषय राखेको भएता पनि एमसीए नेपालले ध्यान दिन नसकेको बताउनु भयो ।

शिवपुरी गाउँपालिकाका उपाध्यक्ष बीर बहादुर तामाङ पनि प्रसारण लाइनले शिवपुरीको वन, कृषियोग्य जमिन नष्ट गर्ने देखिएको हुँदा उचित विकल्पको खोजी हुनु पर्नेमा त्यसो हुन नसकेको गुनासो राख्नु भयो । उहाँले प्रभावित स्थानीयहरु पुस्तौंदेखि जीविकोपार्जन गर्दै आएको पैतृक जमिन पूर्ण रुपमा नष्ट हुने हुँदा जग्गा अधिग्रहण गरिँदा क्षतिपूर्तीको पाटोमा ध्यान दिन आग्रह गर्नू भयो । 'जनताले हुर्काएको सामुदायिक बन नष्ट हुने देखियो, यसको विकल्पमा कहाँ बृक्षरोपण हुन्छ ?प्रष्ट हुनु पर्छ ।' उपाध्यक्ष तामाङले भन्नु भयो -'टावर र तार मुनीका जग्गा पर्नेहरु विस्थापित हुने भएकाले उनीहरुको जिविकोपार्जनको ग्यारेन्टी गरिनु पर्छ ।'

प्रथाजन्य भूमिमा सम्पदा नष्ट हुने

एमसीए-नेपालद्वारा सञ्चालित विद्युत प्रसारण लाइनले आदिवासी तामाङहरुको प्रथाजन्यभूमि अतिप्रभावित हुने भएकोमा पनि पदाधिकारीहरुले आपत्ती प्रकट गरेका छन् । शिवपुरी गाउँपालिका आदिवासी तामाङहरुको परम्परागत भूमि हो ।

विद्युत प्रसारण लाइनबाट शिवपुरी वडानम्बर ५ महाकाली स्थित तामाङहरुको परम्परागत चिहान (दुर्सा) मा नै टावर गाड्ने गरी संकेत राखिएकोमा वडा नम्बर ५का वडा अध्यक्ष रेशमबहादुर मोक्तानले आपत्ती प्रकट गर्नु भयो । वडा कार्यलयबाट चिहानमा लामा पढने डाजाङ सहितको संरचना बनाइरहेको स्थानमा नै टावर राख्ने भए पछि वडाअध्यक्ष लामाले आपत्ती प्रकट गर्नु भएको हो ।

'दुई चार मिटर तल वा माथि सार्न अनुरोध गर्दा पनि उहाँहरुले मान्नु भएन । थप दुव्चेश्वर जाने सडकमा समेत टावर राख्ने कुरा गरिरहनु भएको छ ।' लामाले यही प्रसंगमा थप्नु भयो -'पुर्खौंदेखि सामुहिक रुपमा भोग चलन गर्दै आएको दुर्सा यहाँ परेको छ । अन्यत्र म्हाने, छ्योर्तेन, मन्दिर तथा देउराली लगायतका सम्पदास्थलहरु पनि अतिक्रमण हुने सुनेको छु । यसको विकल्प समेत एमसीए नेपालले दिएको छैन ।'

शिवपुरी गाउँपालिका वडानम्बर ३का वडा अध्यक्ष नाती तामाङले पनि सार्वजनिक सम्पत्तीको संरक्षण गर्न विशेष जोड दिनु भयो । 'पुर्खाले दुख गरेर हुर्काएका सामुदायिक बनहरु नष्ट हुँदैछन्, अर्को बृक्षरोपण कहाँ हुन्छ ?' उहाँले प्रश्न गर्नु भयो ।

विद्युत प्रसारण लाइनबाट उच्च भोल्टेज अर्थात४०० केभीको विद्युत प्रबाह हुने छ । सो प्रसारण लाइनले ११२ वटा सामुदायिक बनको ३३० हेक्टर जमिन र ८ वटा कवुलियत बनको४४२ हेक्टर तथा सरकारी वनको ४४२ हेक्ट जमिनलाई प्रभावित बनाउने छ । शिवपुरी गाउँपालिका शिवपुरी राष्टिय निकुञ्ज अन्तर्गतको मध्यवर्ती क्षेत्र पनि हो । नुवाकोट जिल्लाको शिवपुरी, लिखु, पञ्चकन्या गाउँपालिका र बेलकोटगढी नगरपालिका प्रभावित क्षेत्रहरु हुन् । यस क्षेत्रमा मात्र ४६ हजार ९०८ वटा रुख कटान गर्नू पर्ने वातावरणीय प्रभाव मूल्याँकन प्रतिबेदनमा उल्लेख छ ।

जनस्वास्थ्यमा प्रभाव पर्ने

प्रसारण लाइनका लागि टावर राख्ने र प्रसारण लाइन मुनिको जमिनको मात्र सवाल उठिरहेको भएता पनि प्रसारण लाइनबाट सिर्जना हुने विद्युतीय र चुम्बकीय फिल्ड (इलेक्ट्रिक म्याग्नेटीक फिल्ड, इएमफ) का कारण स्थानीय बासिन्दालाई स्वास्थ्यमा पर्ने प्रभावका बारे स्थानीयहरु कम जानकार रहेको देखिएको छ । विभिन्न अध्ययनहरुले प्रसारण लाइनको विद्युतीय र चुम्बकीय फिल्डबाट अनेकौ रोगहरु लागेको देखिएको छ । विश्व बैकले यस सम्बन्धी छुट्टै मापदण्ड बनाएको छ ।

यसै कारण विज्ञहरुले परियोजना प्रभावितहरुसंग स्वतन्त्र, पूर्व, सुसूचित सहमति (एफपीक) लिनु पर्ने धारणा राख्दै आएका छन् । एमसीए नेपालले पनि प्रभावित आदिवासी जनजाति तथा स्थानीयसंग स्वतन्त्र परामर्स सहित सहमति गर्ने भनिएता पनि हालसम्म सोको कार्यन्वयन हुन सकेको छैन ।

एमसिसीको ५० करोड डलर अनुदानबाट चार प्रसारण लाइन, तीन सबस्टेसन र पूर्व-पश्चिम राजमार्गको ९९ किमि सडकखण्ड मर्मत गर्ने गरी सेप्टेम्बर २०१७ मा अमेरिकासँग सम्झौता भएको थियो । जुन सम्झौता १५ फागुन ०७८ (२७ फेब्रुअरी २०२२) मा संसद्बाट अनुमोदन भएसँगै कार्यान्वयन सुरु भएको हो ।

यसअन्तर्गत लप्सीफेदी-रातमाटे-न्यु हेटौँडा (११७ किमि), रातमाटे-न्यु दमौली (९० किमि), न्यु दमौली-न्यु बुटवल (९० किमि) र न्यु बुटवल-गोरखपुर अन्तरदेशीय प्रसारण लाइनको नेपाल खण्ड (१८ किमि) गरेर चार सय केभी डबल सर्किट क्षमताको तीन सय १५ किमि लामो चार प्रसारण लाइन बनाइँदै छ, जहाँ आठ सय ५६ वटा टावर बन्नेछन् । त्यसका लागि काठमाडौं, मकवानपुर, धादिङ, चितवन, नुवाकोट, पाल्पा, तनहुँ, सिन्धुपाल्चोक, नवलपरासी र नवलपुरमा गरेर १० जिल्लामा जग्गा प्राप्ति गर्नुपर्नेछ । तर, पाँच किमि प्रसारण लाइन पर्ने काठमाडौंमा अझै जग्गा प्राप्तिको प्रक्रिया सुरु भएको छैन । यसको प्रक्रिया अन्तिम चरणमा अगाडि बढाउने एमसिए नेपालको योजना छ । यसैगरी, अन्य नौ जिल्लामा जग्गा प्राप्तिको प्रक्रिया सुरु भए पनि पूर्णता पाउन भने सकेको छैन । इन्डिजियसबाट

# टुसा उम्रिएको आलु बारे भ्रम र यथार्थ !



काठमाडौं । आलु धेरै दिनसम्म त्यसै राखे त्यसबाट टुसा उम्रिन थाल्छ । टुसा उम्रेको आलु खान हुन्छ वा हुँदैन ? यस बारे धेरै चर्चा पनि हुने गर्छ । कतिपय मानिसहरु यसलाई खाँदा पाचन सम्बन्धी समस्या हुने विश्वास गर्छन् भने कोही महिलाहरुले आलुको टुसा हटाएर प्रयोग गर्ने गर्छन् । भारतकी डाइटिशियन स्वाती विष्णोईले टुसा उम्रिएको आलु खान हुन्छ कि हुँदैन भन्नेबारे जानकारी दिएकी छिन् ।

टुसा उम्रिएको आलु स्वास्थ्यका लागि राम्रो होइन । टुसा उम्रनु भनेको यो तरकारी एक रासायनिक प्रतिक्रियाबाट गुज्रिरहेको छ । यस्तो आलु खानु स्वास्थ्यका लागि हानिकारक हुनसक्छ । आलुको खाल्डा भएको ठाउँबाट टुसाहरु निस्कन सुरु हुन्छन् । टुसा उम्रिँदा आलुमा पाइने कार्बोहाइड्रेट स्टार्च सुगरमा परिवर्तन हुन थाल्छन् जसका कारण आलु निकै नरम हुन्छन् । यो प्रक्रिया सोलानिन र अल्फा-केकोनिन नामका दुई अल्कलाइडको सम्मिश्रणका कारण बन्ने गर्छ । सेलोनिनलाई विषाक्त मानिन्छ ।

हरियो रंगको आलु पनि खानु हुँदैन :

हल्का हरियो रङको आलु पनि खानु हुँदैन । आलुको तरकारी बनाउनु अघि, हरियो भाग काटेर अलग गर्नुपर्छ । हरियो आलु खाँदा पनि फूड पोइजनिङ हुनसक्छ । आलु खन्ने बेलामा नै यसमा टुसा उम्रिएको छ भने टुसा हटाएर खान सकिन्छ । अध्ययनका अनुसार यतिबेला आलुको तरकारीमा धेरै पोषक तत्व हुन्छ । तर यदि आलु धेरै दिनसम्म राखिएके छ, त्यो चाउरी परेको छ भने त्यसलाई फ्याँक्नु नै राम्रो हुन्छ ।

आलुले ब्लड सुगर बढाउँछ

नेशनल क्यापिटल पोइजन सेन्टरको रिपोर्ट अनुसार टुसा उम्रेको आलु फ्याँक्दा नै राम्रो हुन्छ । धेरैजसो घरमा आलु एकैपटक किन्ने गरिन्छ । फलस्वरुप केही दिनपछि नै यसमा टुसा उम्रिन सुरु हुन्छ तर मानिसहरु यसलाई नजरअन्दाज गर्दै प्रयोग गर्ने गर्छन् । यो टुसा उम्रेको आलु स्वास्थ्यका लागि फाइदाजनक छ वा हानिकारक भनेर कहिल्यै सोच्नुभएको छ ?

यसमा नेशनल क्यापिटल पोइजन सेन्टरले घरमा भएको आलु टुसा उम्रिएको छ भने यसलाई फ्याँक्नु नै राम्रो हुने बताएको छ । यस्ता आलु स्वास्थ्यका लागि राम्रो हुँदैनन् । टुसा उम्रिएको आलु विषालु हुन्छन् । नेशनल क्यापिटल पोइजन सेन्टरको रिपोर्ट अनुसार आलुमा प्राकृतिक रुपमा केही विषालु तत्व जस्तै सोलेनिन र चाकोनाइन हुन्छ तर यो निकै कम मात्रामा पाइने गर्छन् ।

तर यसको बिरुवा वा पातमा यो अत्यधिक मात्रामा हुन्छन् त्यसैले आलुमा टुसा उम्रिन सुरु हुने बित्तिकै यसमा दुबै विषालु तत्वको मात्रा बढ्न थाल्छ । त्यसैले यस्ता आलुलाई कुनै पनि रुपमा खाँदा शरीरमा ती तत्व प्रवेश गर्ने गर्छन् । रिपोर्टमा जनाए अनुसार एक वा दुई पटक यस्ता आलु खाँदा शरीरलाई खासै हानी नभएपनि लगातार यस्तो आलुको सेवनबाट विशेषगरी पेटसँग सम्बन्धित विभिन्न स्वास्थ्य समस्या देखिन थाल्छन्,।

यस्ता लक्षण देखिन सक्छन्

रिपोर्टका अनुसार यदि आलुको विषाक्त तत्व शरीरमा अत्यधिक मात्रामा पुग्न थाल्यो भने धेरै प्रकारका लक्षणहरू देखा पर्छन् । जस्तै बान्ता हुने, पखाला लाग्ने र पेट दुख्ने । कतिपयमा यसका लक्षणहरू हल्का हुन्छन् भने कतिपयमा यी लक्षणहरूले गम्भीर रूप लिन सक्छन् । गम्भीर अवस्थामा, निम्न रक्तचाप, ज्वरो र टाउको दुखाइ जस्ता लक्षणहरू देखा पर्छन् । यसलाई समयमै रोकिएन भने मृत्यु पनि हुन सक्छ । त्यसैले सतर्कता अपनाउनु राम्रो हुन्छ ।

आलु टुसा उम्रिनबाट कसरी रोक्ने ?

- यदि आलुमा हरियो रङ देखिएको छ वा पहिलादेखि नै टुसा उम्रिन थालेको छ भने त्यसलाई निकाल्नुहोस् ।
- आलुलाई यस्तो ठाउँमा राख्नुहोस् जहाँ सूर्यको किरण पुग्दैन । धेरै चिसो ठाउँमा पनि नराख्नुहोस् ।
- यसलाई सधैं प्याज जस्ता तरकारीहरूबाट अलग राख्नुहोस्, किनकि यसले ग्यास छोड्छ, जसका कारण आलुमा टुसा उम्रिन थाल्छ ।
- यदि तपाईंले धेरै आलुहरू किन्नुभएको छ भने, त्यसलाई कटनको ब्यागमा राख्न सक्नुहुन्छ । ब्याग यस्तो हुनुपर्छ जसबाट हावा पास हुन सकोस् ।
- टुसा उम्रेको आलुलाई बगैंचामा रोपेर अन्य आलु फलाउन सक्नुहुन्छ ।

# कर्मचारीको काममा बोझ थप्दै एआइ !



काठमाडौं । जब च्याट जिपिटी २०२२ मा लाइमलाइटमा आयो, धेरै जसो कम्पनीका मालिकहरु आफ्नो कार्यालयको काममा मद्दत हुने र यसले तत्कालिन जनशक्ति कम गर्छ भन्नेमा उत्साहित थिए ।

धेरै जसो चाहन्थे कि यसले उनीहरूलाई आफ्ना प्रतिद्वन्द्वी कम्पनीहरूसँग प्रतिस्पर्धा गर्न मद्दत गर्नेछ । विश्वभर कार्यालयमा काम गर्न एआइ उपकरणको प्रयोग गर्ने लहर नै आयो । धेरैले आफ्ना कर्मचारीहरूलाई एआइ उपकरणहरू प्रयोग गर्न प्रोत्साहित पनि गरे ।

तर, यी एआइ उपकरणका कारण कम्पनीहरुमा काम सहज हुनुको सत्ता अझ बढेपछि अहिले धेरै जसो यसबाट टाढिन थालेका छन् । एआइ उपकरण प्रयोग गर्न, कर्मचारीहरूले पहिले च्याटजिपिटीको लागि संक्षिप्त तयार गर्नुपर्छ । यसपछि प्राप्त सूचनालाई फेरि क्रसचेक गर्नुपरेका कारण धेरै समय लाग्ने गरेको बताउने गरिएको छ ।

अहिले एआइ उपकरणहरू प्रयोग गर्दा काम सम्पन्न गर्न लाग्ने समय दोब्बर भएको धेरैको गुनासो छ । कम्पनीमा एआई उपकरणको प्रयोगलाई प्रवर्द्धन गर्नुको उद्देश्य मानिसको कामलाई सरल बनाउनु थियो तर यथार्थमा यसका कारण मानिसको काम बढ्दै गएको छ ।

बजारमा एआई टुलको बाढी आयो, तर एउटै उपकरणले धेरै समस्या समाधान गर्न नसक्ने हुनाले धेरैबीच कुन उपकरण प्रयोग गर्ने भन्ने अन्योल पनि छ ।

यद्यपि, एआई उपकरणहरू प्रयोग गर्दा धेरै जसोले महसुस गरेको तनाव पनि हालको अनुसन्धानमा देखिएको छ । फ्रीलान्सर प्लेटफर्म ‘अपवर्क’ ले २५ सय कर्मचारीसँग सर्वेक्षण गरेको थियो । ती कर्मचारी अमेरिका, बेलायत, अष्ट्रेलिया र क्यानडाका थिए ।

जसमध्ये ९६ प्रतिशतले एआई उपकरणको प्रयोगले आफ्नो कम्पनीको उत्पादकत्व बढाउने आशा गरेका छन् । जसमध्ये ८१ प्रतिशतले आफ्ना कर्मचारीहरूलाई एआई प्रयोग गर्न अनुरोध गरेको स्वीकार गरे । तर, सर्वेक्षणमा सहभागी ७७ प्रतिशत कर्मचारीले एआई उपकरणले आफ्नो उत्पादकत्व घटाएर काम बढाएको स्वीकार गरेका छन् ।

त्यसैगरी ४७ प्रतिशत कर्मचारीले रोजगारदाताको अपेक्षाअनुसार कसरी र कसरी उत्पादकत्व बढाउने भन्नेबारे आफूलाई जानकारी नभएको बताए ।

६१ प्रतिशत मानिसले काममा एआई उपकरणको प्रयोगले तनाव र रिस उठ्ने सम्भावना बढाउँछ भन्ने विश्वास गर्छन् । सिभि लेखन कम्पनी रिजुम नाओद्वारा गरिएको सर्वेक्षणमा, ४३ प्रतिशत मानिसहरूले यसले कार्य-जीवन सन्तुलनलाई असर गर्छ भन्ने विश्वास गरेका छन् ।

कार्य व्यवस्थापन प्लेटफर्म आसनले एक अध्ययन गरेको छ । यसले काममा आधारित एपहरू लन्च गर्ने प्रभावहरूको बारेमा कुरा गरेको छ ।

यो सर्वेक्षणमा अस्ट्रेलिया, फ्रान्स, जर्मनी, जापान, बेलायत र अमेरिकाका ९ हजार ६१५ कर्मचारी समावेश गरिएको थियो । उनीहरुले कार्यस्थलमा ६ देखि १५ वटा एप प्रयोग गर्ने बताए । तीमध्ये १५ प्रतिशतले यति धेरै उपकरणका कारण मेसेज र नोटिफिकेशन हेर्न सम्भव नभएको प्रतिक्रिया दिएका छन् ।

के भन्छन् विज्ञ ?

लस एन्जलसको क्यालिफोर्निया विश्वविद्यालयका व्यवस्थापन प्राध्यापक केसी होम्सले यस अध्ययनको बारेमा टिप्पणी गरेकी छन् । उनले भनेकी छन्- ‘एकभन्दा बढी एप प्रयोग गर्नका लागि पहिले सिक्नुपर्छ, जसका लागि बढी समय लाग्छ र बिचमा परिवर्तन गर्नमा पनि समय खर्चिन्छ, यो एकदमै नराम्रो कुरा हो । किनभने, हामी समय बर्बाद गर्ने बारे बढी संवेदनशील छौं ।’

लेह स्टिल अहिले वकिलबाट प्रशिक्षक बनेकी छिन् । तिनीहरूले कानुनी पेशेवरहरूलाई मानसिक तनावबाट राहत पाउन मद्दत गर्छन् । धेरै मानिसहरू मद्दतको लागि उनीहरू कहाँ आउने समस्या एआइमा आधारित उत्पादकता उपकरणहरूको आगमनको साथ, तिनीहरूका कम्पनीहरूले उनीहरूबाट धेरै उत्पादकत्वको अपेक्षा गरिरहेका छन् । यस्तो अवस्थामा उनीहरुमाथि कामको चाप बढ्दै गएको छ ।

उनी भन्छिन्, ‘मैले देखेको सबैभन्दा ठूलो कुरा यो हो कि कम स्रोतमा धेरै गर्नको लागि निरन्तर माग छ, तर कम्पनीहरूले उनीहरूले प्रणालीमा समावेश गर्ने प्रविधिलाई बेवास्ता गरिरहेका छन्, तिनीहरू सहयोगी छैनन् ।’

अहिले एआइ उपकरणको वृद्धिको कारणले मात्र होइन, यसको प्रभावको कारण पनि मानिस विभिन्न समस्यमा परेको बताइएको छ । एआइ उपकरणहरू सिक्न समय लाग्छ र तिनीहरूलाई आफ्नो काममा समावेश गर्न समय लाग्ने धेरै जसोको राय छ । धेरै प्रविधिहरू मौलिक रूपमा कानूनी ठाउँको लागि डिजाइन गरिएको छैन, त्यसैले यो थप चुनौतीपूर्ण हुन सक्ने विज्ञहरुले बताएका छन् ।

अहिले एआइ उपकरणको बाढी नै छ र तिनीहरूलाई सही रूपमा कसरी प्रयोग गर्न भन्ने ज्ञान दिन कम्पनीहरु चुकिरहेको पाइएको छ । यी एआई उपकरणहरू हाम्रो जीवनमा राम्रो उत्पादकत्वको कारण बन्न सक्छन्, तर त्यसअघि यी उपकरणहरूको प्रशिक्षण र फिल्टरिङको आवश्यकता छ । तर, सीमित स्रोतहरू भएका साना कम्पनीहरूका लागि एआई उपकरणहरू धेरै उपयोगी साबित हुनसक्ने विश्वास भने गरिएको छ ।

# नेपाल संवत्लाई व्यवहारमा लागू गर्न माग

काठमाडौं । नेपाल संवतलाई राज्यले राष्ट्रिय मान्यता दिएपनि अझै पूर्ण कार्यान्वयन हुन नसकेकोमा सरोकारवालाहरुले जोड दिएका छन् । नेपाल संवत ११४५ नयाँ वर्षको अवसरमा आयोजित एक कार्यक्रमका वक्ताहरुले यस्तो जोड दिएका हुन् ।

कार्यक्रममा बोल्दै न्हूदँ राष्ट्रिय समारोह समिति ११४५ का अध्यक्ष साथै पूर्व संघीय मामिला तथा सामान्य प्रशासन मन्त्री राजेन्द्र प्रसाद श्रेष्ठले नेपाल संवतको आन्दोलन अझै नसकिएको विचार राखे ।

राष्ट्रिय संवतको मान्यता पाइसकेको नेपाल संवतलाई सबै मन्त्रालय, सरकारी निकायहरुमा प्रयोग गर्न लगाउन निरन्तर लागिरहनुपर्ने विचार राखे । ‘राष्ट्रिय मान्यता पाएको घोषणा मात्र गरेर पुग्छ, व्यवहारमा लागू गर्न पर्दैन ? यसलाई पूर्ण रुपमा व्यवहारमा लागू गराउन दबाब अझै आवश्यक छ, हामी निरन्तर लागिरहनु आवश्यक छ’ अध्यक्ष साथै पूर्व मन्त्री श्रेष्ठको भनाई हो ।

गत मंगलबार इन्द्र विनायक क्लबले कंकेश्वरीमा तिहार पर्व र नेपाल संवत ११४५ नयाँ वर्षको उपलक्ष्यमा सुकुन्दा ऱ्यालीको आयोजना गरेको हो । सोही ऱ्यालीको उद्घाटन कार्यक्रममा वागमती प्रदेश सभा सदस्य समिता खड्गीले नेपालभाषा र तामाङ भाषाले प्रदेशको सरकारी कामकाजी भाषाको मान्यता पाइसकेपछि अब प्रदेश सभामा अनुवादकको व्यवस्था गर्न पहल गरीरहेको बताइन् ।

‘अचेल म प्रदेश सभामा नेपालभाषामै बोल्ने गरेको छु, अब कसैले बुझ्दैन भने अनुवादक राख्नुपर्यो । अनुवादकको व्यवस्था गर्न हामीले प्रयास गरीरहेका छौं’ प्रदेश सभा सदस्य खड्गीले भनिन् ।

कार्यक्रममा नेवाः देय् दबूका उपाध्यक्ष उमेश स्थापितले देशकै नामबाट रहेको नेपाल सम्वत नेवाः समुदायको मात्र नभएकोमा जोड दिए । त्यस्तै काठमाडौं महानगरपालिका १९ वडाका अध्यक्ष राजेश श्रेष्ठ र भूमि अधिकार संरक्षण संघर्ष समितिका संयोजक श्यामकृष्ण प्रजापतिले राज्यले आदिवासी समुदायको भाषा, संस्कृति खोसिसकेको र अब विभिन्न नीति र मापदण्डको नाममा भूमि खोस्न खोजिरहेको दावी गरे ।

स्थानीय जनताको भूमि संरक्षणको लागि आफुहरुले कुनै कसर बाँकि नराख्ने वडाध्यक्ष श्रेष्ठ र संयोजक प्रजापतिको भनाई थियो । कार्यक्रमलाई संयुक्त युवा क्लब, नेपाल राष्ट्रिय खड्गी समाज १९ वडा शाखा, ढोका फल्चा पुचः र झीगु इनाःत्वाः पुचःले सह आयोजना गरेको थियो ।

कार्यक्रममा आयोजकका तर्फबाट इन्द्र विनायक क्लबका अध्यक्ष प्रतिक खड्गी, ढोका फल्चा पुचःका अध्यक्ष जेशिस शाहीले आआफ्नो विचार राखेका थिए । औपचारिक उद्घाटन कार्यक्रमपछि सुकुन्दा ऱ्याली निकालिएको थियो । इन्द्रसभा मार्गबाट सुरु भएको ऱ्याली मरुढोका, कंकेश्वरी, दमाइटोल, यट्खा, चसान हुँदै प्याफलबाट मरुहिति, शान्ति निकुन्ज चोक हुँदै इन्द्रसभा मार्गमै पुगेर सम्पन्न भएको थियो ।

## राष्ट्रिय.....

उनले नेपाल संवत् नेवाः समुदायको भावनासँग जोडिएको भए पनि यो नेपाल राष्ट्रकै मौलिक संस्कृतिको महत्वपूर्ण हिस्सा भएको बनाए । ‘नेपाल संवतले राष्ट्रिय संवतको मान्यता प्राप्त गर्नुपर्छ भनेर नेपाल मन्दलमा रहेका खासगरी काठमाडौं, ललितपुर र भक्तपुरका नेवार समुदायले विगतदेखि निरन्तर आन्दोलन गर्दै आएको थियो । विभिन्न समयका सरकारहरुले त्यो आन्दोलनको एजेण्डा पूरा गर्नुको साटो दबाउन खोजेको गुनासो यो समुदायका अगुवाहरुबाट सुनिरहेको थिए- अध्यक्ष प्रचण्डले भने, ‘२०६५ मा पहिलोपटक प्रधानमन्त्री भएको बेलामा मैले नेपाल संवतलाई राष्ट्रिय मान्यता प्रदान गर्ने निर्णय मन्त्रिपरिषद्बाट निर्णय गराएको थिएँ, त्यसका लागि मलाई अहिले पनि गर्व लागिरहेको छ ।’

नेपाल संवतले राष्ट्रिय मान्यता पाएको लामो समयसम्म पनि यसको कार्यान्वयनमा अलमल भएको देखेर गत वर्ष आफू तेस्रोपटक प्रधानमन्त्री भएको बेला विक्रम संवत् प्रयोग हुने सबै सरकारी कागजातमा नेपाल संवत् प्रयोग गर्ने निर्णय मन्त्रिपरिषदबाटै गराएको उनले स्मरण गराए । उनले भने, ‘त्यति मात्र होइन, हाम्रो पार्टीले बागमती प्रदेश सरकारको नेतृत्व गरेको बेलामा प्रदेशमा नेपाल भाषा र तामाङ भाषालाई सरकारी कामकाजको भाषाको रुपमा प्रयोग गर्ने निर्णय गरिएको छ, यो पनि महत्वपूर्ण उपलब्धि हो ।’

शंखधर साख्वाले गरीब जनताको ऋण मोचन गर्ने काम गरेर पवित्र कार्य गरेपछि उहाँकै सम्मानमा नेपाल संवत् सुरु गरिएको प्रसंग उल्लेख गर्दै पूर्वप्रधानमन्त्री प्रचण्डले भने, ‘२०६५ को एउटै मन्त्रिपरिषद बैठकबाट हामीले नेपाल संवतलाई राष्ट्रिय मान्यता दिने निर्णय मात्रै गरेनौं, शंखधर साख्वाले जस्तै हामीले पनि गरिब किसानहरुको निश्चित रकम ऋण मिनाहको निर्णय पनि गर्यौं ।’

आफू पहिलोपटक प्रधानमन्त्री भएको बेला गरिब किसानको ऋण मिनाह, मध्यपहाडी लोकमार्ग, मदन भण्डारी मार्गलगायतका ठूला पूर्वाधारको सुरुवात गरेको स्मरण गर्दै दोस्रोपटक प्रधानमन्त्री हुँदा लोडसेडिङ अन्त्य गरेर उज्यालो नेपालको निर्माण हुँदै तेस्रोपटक प्रधानमन्त्री भएको बेलामा नेपाली इतिहासमै पहिलोपटक सरकारको अगुवाईमा भ्रष्टाचारविरुद्धको अभियान सुरु गरिएको बताए । हरेकपटक माओवादी नेतृत्वको सरकारले ऐतिहासिक कामको थालनी गरेको उल्लेख गर्दै उनले यसलाई जनताको बीचमा लैजान नसक्नु कमजोरीको रुपमा रहेको बताएका छन् ।

पछिल्लो समय आफ्नो नेतृत्वको सरकारले धेरै काम गर्न खोजेको देखेर सरकार ढालिएको उल्लेख गर्दै अध्यक्ष प्रचण्डले सरकारमा हुँदा सुरु गरिएको सुशासन, सामाजिक न्याय र समृद्धिको अभियान अब पार्टीको मुख्य एजेण्डा हुने र २०८४ माओवादीको हुने बताए । सरकारबाट निस्केपछि आफूले एकपटक प्रदेश तहमा पुगेर जनताको अवस्था बुझ्ने प्रयास गरेको उल्लेख गर्दै उनले देशभरि जनताले माओवादी र प्रचण्डलाई माया गर्न थालेको दावी गरेका छन् ।

माओवादी केन्द्र मध्यपुर थिमी नगर अध्यक्ष एवं मध्यपुर नरपालिकाका उपप्रमुख विजयकृष्ण श्रेष्ठको अध्यक्षतामा भएको कार्यक्रममा पार्टीका उपाध्यक्ष अग्निप्रसाद सापकोटा, स्थायी समिति सदस्य एवं पूर्वमन्त्री शशी श्रेष्ठ, केन्द्रीय सदस्यहरुले शुभकामना व्यक्त गरेका थिए ।

# विश्वकप लिग-२ क्रिकेट : अमेरिकासँग नेपाल पराजित




एजेन्सी । आइसिसी विश्वकप क्रिकेट लिग-२ त्रिकोणात्मक सिरिजमा अमेरिकासँग नेपाल पराजित भएको छ । अमेरिकाको डालसस्थित ग्राण्ड पेरी क्रिकेट रङ्गशाला सम्पन्न खेलमा नेपाल अमेरिकासँग ३७ रनले पराजित भएको हो । यसअघि भएको पहिलो खेलमा पनि नेपाल अमेरिकासँग तीन विकेटले पराजित भएको थियो ।

अमेरिकाले दिएको दुई सय ८२ रनको विजयी लक्ष्य पछ्याएको नेपाल ४९ दशमलव पाँच ओभरमा सबै विकेट गुमाउँदै दुई सय ४४ रनमा समेटियो । नेपालका लागि अनिल साहले सर्वाधिक ५२ रनको योगदान दिए । उनले ८० बलमा चार चौका र एक छक्कासहित सर्वाधिक ५२ रन जोडेका हुन् ।

नेपालले ओपनर आसिफ शेखलाई ६ रनमा गुमाएको थियो । दोस्रो विकेटलाई अनिल र कुशल भुर्तेलले ७१ रनको साझेदारी गरेका थिए । कुशल भुर्तेलले २९ रन जोडे । त्यसपछि कुशल मल्लले ५४ बलमा एक चौका र एक छक्कासहित ३३ रन बनाएर आउट भए । कप्तान रोहित पौडेल एक, गुल्सन झा १२ तथा आरिफ शेख २१ रन बनाउँदै आउट भए ।

त्यसपछि सोमपाल कामीले २७ बलमा चार चौका र दुई छक्कासहित ४६ रन बनाए । दीपेन्द्रसिंह ऐरीले ३८ बलमा एक चौका र एक छक्कासहित ३१ रन बनाए । करण केसीले पाँच तथा सन्दीप लामिछानेले दुई रन बनाए ।

अमेरिकाका सौरभ नेत्रवालकरले सर्वाधिक चार विकेट लिए । नोष्थुश केंजिगे र साड्ली भान शाक्लीले समान दुई/दुई तथा जसदीप सिंह र हरमित सिंहले समान एक/एक विकेट लिए । त्यसअघि टस हारेर पहिला ब्याटिङको निम्तो पाएको अमेरिकाले निर्धारित ५० ओभरमा आठ विकेट गुमाउँदै दुई सय ८१ रनको योगफल बनाएको थियो ।

अमेरिकाका लागि साइतेजा मकामल्लाले सर्वाधिक ७५ रनको योगदान दिए । उनले ८७ बलमा चार चौका र एक छक्कासहित सर्वाधिक ७५ रनको योगदान दिएका हुन् । त्यस्तै कप्तान मोनाङ्क पटेलले ८१ बलमा पाँच चौका र एक छक्कासहित ६७ रन जोडे । ओपनर शयान जहानजिगर १० र आरोन जोन्स २६ रनमा आउट भए । हरमित सिंहले ४४ बलमा तीन चौका र तीन छक्कासहित ५९ रनको योगदान गरे ।

नेपालका गुल्सन झाले तीन विकेट लिए भने सोमपाल कामी र सन्दीप लामिछानेले समान दुई-दुई विकेट लिए । त्यस्तै कुशल भुर्तेलले एक विकेट झारे । नेपालल लिग-२ मा ११ खेलमा दुईमा जित र आठमा हारसहित पाँच अ्कका साथ अङ्कतालिकाको सातौं स्थानमा छ ।

त्यस्तै अमेरिका १२ खेलमा आठमा जितसहित १६ अङ्का साथ शीर्षस्थानमा छ । क्यानडा १२ खेलमा १६ अङ्का साथ नेटरनरेटका कारण दोस्रो स्थानमा छ । आइसीसी विश्वकप लिग-२ अन्तर्गत स्कटल्याण्डविरुद्धको खेल बर्षाले रद्ध भएको छ । डल्लासस्थित ग्राण्ड प्रेरी स्टेडियममा हुने खेलमा नेपालले पहिला ब्याटिंग शुरु गरेर एक विकेट गुमाउँदै २६ रन बनाएपछि बर्षा शुरु भएपछि खेल हुन सकेको थिएन । त्यसपछि खेल रद्ध गरिएको थियो । खेल हुन नसकेपछि दुवैले एक एक अंक बाँडेका छन् ।

यस सिरिजमा पनि नेपालको खराब प्रदर्शन रह्यो । नेपालले अमेरिकासँगका दुवै खेलमा हार बेहोरेको थियो भने स्कटल्याण्डविरुद्धको एक खेल जितेको थियो ।

त्यस्तै विश्व कप लिग टु अन्तर्गतको ओडिआई सिरिजमा ओमानले नेदरल्यान्ड्सलाई पराजित गरेको छ । मंगलवार ओमानको मस्कटमा सम्पन्न खेलमा घरेलु टोलीले नेदरल्यान्ड्सलाई ८ विकेटको फराकिलो अन्तरले पराजित गरेको छ । आफ्नो ओडिआई इतिहासमा पहिलो पटक नेदरल्यान्ड्समाथि ओमानले जित हात पारेको हो ।

नेदरल्यान्ड्सले दिएको १ सय ३३ रनको सामान्य लक्ष्य ओमानले ३४.१ ओभरमा २ विकेट गुमाएर पूरा गर्यो । ओमानको जितमा कप्तान जतिन्दर सिंहले ९५ बलमा ३ चौकाको सहयोगमा सर्वाधिक ५८ रन जोडे । अशिष ओडेराले ५७ बलमा २७, वासिम अलिले ४१ बलमा नट आउट २४ तथा हमिद मिर्जाले नट आउछ ८ रन जोडे । नेदरल्यान्ड्सका लागि आर्यन दत्त र रोलोफ भान डर मिर्वेले समान १ विकेट लिए ।

त्यसअघि टस हारेर पहिले ब्याटिङ गरेको नेदरल्यान्ड्सले ४०.२ ओभरमा सबै विकेट गुमाएर १ सय ३२ रन मात्र बनाएको थियो । नेदरल्यान्ड्सका लागि बास डि लिडेले ८९ बलमा ५ चौका र १ छक्काको सहयोगमा ५१, नोह क्रसले ४३ बलमा २९ तथा टिम भान डर गुग्टेनले १२ रन जोडे ।

नेदरल्यान्ड्सका लागि अन्य ब्याटरले दोहोरो अंकमा रन बनाउन सकेनन् । ओमानका लागि शकिल अहमदले ४ तथा अमिर कलिम र समय श्रीवास्तवले समान २ विकेट लिए ।

८ राष्ट्रको सहभागीता रहेको लिगमा जितसँगै ओमान १० खेलमा १० अंकका साथ छैठौं स्थानमा छ । नेदरल्यान्ड्स भने समान खेलमा १२ अंकका साथ चौथो स्थानमा छ । नेपाल १२ खेलमा ६ अंकका साथ पुछारबाट दोस्रो स्थानमा छ ।

२०२७ सम्म चल्ने लिगमा शीर्ष ४ देश ओडिआई विश्व कपको ग्लोबल छनोटमा स्थान बनाउँने छन् । बाँकी ४ देशले ग्लोबल छनोटमा स्थान बनाउँन प्लेअफ खेल्न पर्ने हुन्छ ।

## नेपाल....

पत्रिमामा छापिएको पन्तको लेखप्रति असहमत हुँदै श्रीरत्नकृष्ण श्रेष्ठले सोही पत्रिकामार्फत लेख छपाएका थिए । श्रेष्ठको आलेखको 'नेपालसंवत् आज हामी नेपालीले विभिन्न कार्यक्रम गरेर मनाउँदै आएको यहाँ सबलाई विदित् होला' भन्ने वाक्यलाई लिएर पन्तले लेखेका छन्–

'पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म फैलिएको, चार वर्ण ३६ जातको साझा फूलबारी भएको नेपाल अधिराज्यमा नेपालसंवत् कतिले मान्छन् ? जरुर मैथिलहरू नेपालसंवत् मान्दैनन्, न त राई-लिम्बु नै मान्छन् । के नेवारहरू मात्र नेपाली हुन् ? बाँकी भाषाभाषीहरू चाहिँ नेपाली होइनन् ? कसो श्रेष्ठजी, तपाईं के भन्नुहुन्छ । ...के यो माग तराईका बन्धुहरूको हो ? के भोटमूलका नेपालीहरूको हो ? के पर्वतेहरूको हो ? के नेवारबाहेक अरु नेपाली नेपाली होइनन् ?' नेपाल संवत्लाई राष्ट्रिय मान्यता दिनु हुँदैन भनेर त्यतिबेला इतिहासकार महेशराज पन्त खरो रुपमा उत्रिएको देखिन्छ ।

२०३९ वैशाख सङ्क्रान्तिमा उनको पुस्तक 'नेपालसंवत्को राष्ट्रिय मान्यताको अनौचित्य' छापियो । पुस्तकको 'भन्न बाँकी कुरा' शीर्षकको भूमिकामा पन्तले लेखेका छन्, 'यो सानो पुस्तक विक्रमसंवत्को राष्ट्रिय मान्यता खारेज गरी नेपालसंवत्लाई राष्ट्रिय मान्यता दिनुपर्छ भन्ने मागको अनौचित्यलाई लिएर वि.सं. २०३८ कार्तिक १९ गतेदेखि चैत २५ गतेसम्म पत्रपत्रिकामा छापिएका मेरा लेखको सङ्ग्रह हो ।'

२०३८ कात्तिक १९ गतेको आलेखमा पन्तले लेखेका छन्, 'संवत्का नाउँमा नेपाल शब्द हुँदैमा त्यस संवत्ले राष्ट्रिय मान्तया पाउनुपर्छ र एकथरी अल्पसंख्यक र एकै ठाउँमा गुचमुचिएर रहेका भाषाभाषीहरूको स्वत्व कायम राख्न बहुसंख्यक नेपालीहरूले परम्परादेखि चलेर आएको, नेपाली जनजीवनमा भिजेको विक्रमसंवत् छोडेर नेपालसंवत् चलनचल्तीमा ल्याउन पनि आवश्यकता छैन ।

फेरि भारतमा पनि चलेको छ भन्दैमा विक्रम संवत् कसरी अराष्ट्रिय भयो, यो पनि आश्चर्यलाग्दो छ । आज ईसवी संवत् सारा युरोप र अमेरिकाको साझा संवत् छ । तर जसको नाउँमा यो संवत् चल्यो, न ती युरोपका थिए, न अमेरिकाकै थिए भन्ने कुरा यहाँलाई थाहै छ ।'

विक्रम संवत्को ठाउँमा नेपालसंवत्लाई राष्ट्रिय मान्यता दिँदा भोलिका दिनमा अन्य समुदाय वा क्षेत्रका जनताले पनि आफ्नो अनुकूलको संवत्लाई मान्यता दिनुपर्ने माग गर्न सक्ने उनको तर्क थियो ।

'तराईका हाम्रा बन्धुहरूले नेपालसंवत्को ठाउँमा लक्ष्मणसंवत् आदि स्थानीय संवत्को राष्ट्रिय स्तरको मान्यताको लागि प्रश्न उठाउँदैनन् र पर्सि भोटमूलका हाम्रा बन्धुहरूले भोटको संवत्को राष्ट्रिय स्तरको मान्यताको माग गर्दैनन् भनी भन्न सकिँदैन,' उनले लेखेका छन्, 'भोटमूलका हाम्रा बन्धुहरूले ल्होसर मनाएजस्तै हाम्रा नेवार बन्धुहरूले पनि आफ्नो संवत्को नयाँ वर्ष मनाउनु राम्रो कुरा हो । तर नेपाल संवत्को प्रचार गर्दा विक्रम संवत्लाई अराष्ट्रिय भनेर लाञ्छना लाउनुचाहिँ पक्कै पनि राम्रो कुरा होइन ।'

त्यतिबेला चन्द्रशमशेरको आज्ञाको भरमा विक्रम संवत् चलेको बताइन्थ्यो । यसमा पन्तको जवाफ थियो, 'चन्द्रशमशेर श्री ३ महाराज हुनुभन्दा झन्डै साढे पाँच सय वर्षअगाडिदेखि नेपालको विभिन्न भागमा विक्रम संवत्को चलनचलती भएको प्रमाण जुटाउन सकिन्छ । कर्णालीप्रदेशका राजा पृथ्वी मल्लको लेखमा, नेपाल खाल्डो र वरपरका इलाकामा राज्य गर्ने नेवार राजा स्थिति मल्लको लेखमा, उनका छोरा धर्म मल्लको पालाको लेखमा, पाल्पा, तनहुँ, मकवानपुर, चौदण्डी, विजयपुर राज्यहरूमा राज्य गर्ने सेन राजाहरूका लेखमा, ...पृथ्वीनारायणदेखिका सबै शाह राजाहरूका लेखमा विक्रम संवत्को प्रयोग भएको छ ।'

त्यतिबेला भारतीय मूलको विक्रम संवत्को सट्टा नेपाल संवत्लाई मानिनुपर्ने आवाज उठेको थियो ।

यसमा पन्तको जवाफ थियो, 'यस्तो माग गर्नेहरूले देवनागरी लिपिमा लेखिएको नेपाली भाषालाई राष्ट्रभाषा मान्नाले देवनागरी लिपि भारतीय मूलको भएको र देवनागरी लिपि आजसम्म भारतमा पनि चलिरहेकोले र नेपाली भाषा भारतका हिन्दी बंगाली भाषाहरूको नजिकको हुनाले देवनागरी लिपिमा लेखिएको नेपाली भाषालाई हटाई अन्त कतै नचलेको, नेवारी लिपिमा लेखिएको, नामै नेपालभाषा भएको नेवारी भाषालाई राष्ट्रभाषा मान्नुपर्छ भन्ने माग भोलि अवश्य गर्नेछन् भनी हामीले विचार गर्नुपर्ने खण्ड आइसकेको छ ।'

पञ्चायती व्यवस्थामा बहस मात्रै भए, सरकारी स्तरबाट खास त्यस्तो निर्णय भएको पाइँदैन । बहुदल आएसँगै विभिन्न समुदायले आफ्नो संस्कृति, सभ्यता र पहिचानका विषय उठान गर्न थाले । यी विषय दशवर्षे माओवादी जनयुद्ध काल र संविधानसभा कालमा उत्कर्षमा पुगेका थिए । २०५६ मा तत्कालीन सरकारले नेपाल संवत्का प्रवर्तक शंखधर साख्वाःलाई राष्ट्रिय विभूति घोषणा गऱ्यो । यसले नेपाल संवत्का पक्षधरहरूलाई बल मिल्यो । उनीहरूले नेपाल संवत्लाई राष्ट्रिय मान्यता दिनुपर्न माग गरिरहे ।

गणतन्त्रपछि २०६५ सालमा प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड' नेतृत्वको सरकारले नेपाल संवत्लाई राष्ट्रिय मान्यता दियो । यद्यपि यो घोषणा व्यवहारमा आउन सकेको छैन ।

'सन् २०११ र २०१२ मा आएर पनि सरकारले दैनिक व्यवहारमा यो पात्रो ल्याउने घोषणा गरेको थियो । यसबाहेक सन् २०१३ मा सरकारले नेपाल संवत्को नयाँ वर्षको दिनलाई सार्वजनिक बिदा घोषणा गरेको थियो । सरकारका यी निर्णयहरू ऐतिहासिक छन् र नेपालको राष्ट्रियताको दृष्टिकोणबाट ठुलो महत्त्व बोकेका छन्,' विश्व नेवा सङ्गठनका संस्थापक अध्यक्ष डा. बालगोपाल श्रेष्ठ भन्छन्, 'सरकारले आफ्ना सबै राष्ट्रिय कामकाजमा र विदेशी मुलुकसँगको औपचारिक कार्यहरूमा क्रिस्चियन संवत्सँगै नेपाल संवत्को पनि अनिवार्य प्रयोग गर्न थाल्छ भने सबभन्दा उपयुक्त हुन्छ । क्रिस्चियन संवत्सँगै नेपाल संवत्को प्रयोगले कुनै पनि भ्रमका लागि ठाउँ छाड्ने छैन । यसले नेपालको राष्ट्रिय गौरवलाई विश्वभर नै बलियो बनाउनेछ ।'

## पूर्व प्रम.....

नेमकिपा माथि खनिएका हुन् । भक्तपुर नगरपालिकाले भाज्या पोखरीको दक्षिण तर्फ ट्र्याक खोल्न भक्तपुर क्याम्पसको गेटमा डोजर चलाएपछि भक्तपुर काँग्रेस असन्तुष्ट रहेको छ । भक्तपुर क्याम्पस स्वविवुमा नेपाली काँग्रेसको विद्यार्थी संगठनको नेतृत्व रहेको छ । सोही विषयमा बिरोध स्वरुप काँग्रेसले शुभकामना कार्यक्रम भक्तपुर क्याम्पस परिसरमा आयोजना गरेको बताइन्छ ।

कार्यक्रममा प्रतिनिधि सभा सदस्य समेत रहेका जिल्ला सभापति दुर्लभ थापाले नेमकिपाको कारण जनताले धेरै दुःख पाएको दावी गरे । भक्तपुर क्याम्पसमा भक्तपुर नगरपालिकाले भौतिक आक्रमण गरेको उनको आरोप छ । "एकातिर सरकारी क्याम्पसमाथि आक्रमण गर्ने, अर्कोतर्फ ख्वप विश्वविद्यालय चाहियो भनेर माग्ने ? उनले आक्रोश पोखे ।

नेमकिपाले पाटी निकटका विद्यालय र कलेजहरुलाई मात्र प्रश्रय दिएको आरोप लगाउदैं उनले भने, "नारायणमानको दस्तावेज पढाउने विद्यालय र कलेजहरु आवश्यक छैन, यसतर्फ सबै पार्टीको ध्यान जानु जरुरी छ ।" कार्यक्रममा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्री बद्री पाण्डे, नेपाली काँग्रेस केन्द्रीय सदस्य बलबहादुर केसी, बागमति प्रदेश सभापति ईन्द्र बाँनियाँ, जिल्ला नेता रविन्द्र प्रधान, यादव प्रसाद अधिकारीलगायतले समेत सम्बोधन गरेका थिए । सो अवसरमा प्रदेश सांसद सुरेश श्रेष्ठ, मध्यपुर थिमिका प्रमुख सुरेन्द्र श्रेष्ठ, चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्री, प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्याल, नेपाली काँग्रेस केन्द्रीय सदस्य मदनकृष्ण श्रेष्ठ, पूर्व प्रदेश मन्त्री कृष्णलाल भडेल, रजनी जोन्छे लगायतको उपस्थिति रहेको थियो ।

## नेपाल संवत्.

विभिन्न राज्यहरू वज्जी, लिच्छबि, गुजरात, मेवाड, चितौड आदिमा शक संवत चल्दथ्यो । यसरी पुनः शक संवत् प्रयोगमा आउनाका कारण केलाउँदा पृथ्वीनारायण शाहले आफ्नो पुर्ख्यौली राज्यमा प्रचलित संवत् भित्र्याएको देखिन्छ ।

त्यतिबेला नेपालको आफ्नै संवत् नेपाल संवत अस्तित्वमा आइसकेको थियो । नेपाल सवत् फेरि शक संवत्कै परिमार्जित र विकसित रूप पनि हो । किनकि नेपालको तिथिमिति र चाडपर्वलाई निरन्तरता दिने मात्र हैन त्यसलाई क्रमबद्ध रूपमा मनाउने पद्धति यसमै निहीत छ । जस्तै नेवाः समुदायले मनाउने मोहनी अरु समुदायले मनाउने दशैं वा दशहराभन्दा अलि भिन्न छ । नेवारहरूले कुछि भ्वय्, स्याक्वःत्याक्वः, चालँ (अर्थात् अष्टमी, नवमी र दशमी) मनाउँछ, जुन आदि कालदेखि नै क्रमवद्धरूपमा मनाउने चलन थियो र छ । स्वन्ति दीपावली (त्रिहार) भनेर लगातार तीन दिन तीन वटा तिथिमा लगातार मनाउने चलन चलिरहेको छ । नेपाल संवत् अनुसार नेवाः समुदायले लक्ष्मी पूजा वर्षको अन्तिम दिनका रूपमा मनाउँछन् । त्यस दिन विशेष गरी वर्षभरिकै हिसावकिताबको फरफारक गर्ने काम हुन्छ । लक्ष्मी पूजा गरेर धनको देवता मानेर धनधान्यले पूर्ण होस् भनेर आराधना गर्ने गरिन्छ ।

भोलिपल्ट नेवाः समुदायले म्ह पूजा (आत्म पूजा) गर्छन् । यसमा मन्द बनाएर आफ्नो शरीरलाई पूजा गर्ने गरिन्छ । मन्दःमा धान (वा), लावा (ताय्), आखे, गेडा मास (ग्वमाय्) कालो भट्मास (हाकुमुस्या) लगायतका खाद्यवस्तुलाई समेत राखी पूजा गरेर सुस्वास्थ्य र दीर्घायुको कामना गर्ने गरिन्छ । त्यसरी नै बिमिरा, ओखर, बदाम आदिलाई पनि पूजा गर्ने चलन छ । नेपाल संवत्को प्रारम्भपछि दोस्रो दिन किजापूजा (भाइटीका) मनाइन्छ । त्यस दिन वसुधैव कुटुम्बकमको मान्यताअनुसार भातृत्वभाव प्रदर्शन गर्दै दिदीबहिनी दाजुभाइ एक आपसमा मायाँ र खुशी साट्छन् । यस्तो परम्परा नेपाल संवत प्रारम्भ हुनुभन्दा अगाडी नै भए पनि यसलाई पछि नेपाल संवत प्रारम्भ गर्दा म्ह पूजाकै दिनबाट नयाँ वर्ष सुरुवात गरिंदा सुनमाथि सुगन्ध भनेजस्तै भयो ।

पृथ्वी नारायण शाहबाट आधुनिक नेपाल निर्माण भएपछि जुन कारणले हटाइ सकेको शक सम्वत् नेपालमा पुनः चलाए पछि राणाहरूले सत्ता हातमा लिएपछि त्यसैको हुबहु नक्कल गरेर शक संवत् हटाए र वि.सं. १९६२ (नेपाल संवत् १०२६) मा तिनीहरूले पनि आफ्नै पुर्खासँग जोडेर विक्रम संवत भित्र्याए । नेपालमा राणा शासन सुरु भएपछि जनताका राजनीतिक र आर्थिक अधिकार मात्रै होइन, सांस्कृतिक अधिकारहरू पनि थप हनन भए ।

नेपालको इतिहासका जानकार सबैलाइ थाहा छ, जंगबहादुर राणा नभई कुँवर थरका थिए । राजकूलका भारदार रहेका उनले कोत पर्व गरी सत्ता हातमा लिएपछि आफ्नो पुर्खाहरू तत्कालीन उज्जैन राज्यको राणा खलक भएको बताउँदै त्यहाँका राजखलकसँग नाता जोडेर कुँवरबाट राणा बने । चन्द्र शमकेरको पालामा आएर तत्कालिन उज्जैन राज्यमा प्रचलित विक्रम संवत्लाई नेपालमा प्रचलनमा ल्याउने घोषणा गरे । यदि राणाहरूमा राष्ट्रियताको भावना भएको भए नेपाल संवतलाई नै पूर्ण प्रयोगमा ल्याउन सक्थे ।

नेपालमा विक्रम संवत् चलाउनु पर्ने पक्षमा तर्क दिँदा अघि सार्ने एउटा मुख्य तर्क त्यतिबेलासम्म नेपालमा प्रचलनमा रहेका संवतहरू तिथिमा आधारित भएकाले प्रत्येक ४ वर्षमा १२ महिनाको सट्टा १३ महिना हुने हुँदा अतिरिक्त एक महिनाको तलब भत्ता बढी खुवाउन पर्ने बाध्यता हो भन्ने गरेको छ । तर विक्रम संवत भित्राएको बखत त्यस संवतमा पनि त्यहि समस्या थिए । त्यसैले त्यसमा कुनै सत्यता देखिंदैन । किनभने तत्कालिन समयमा उज्जैनमा प्रचलित विक्रम संवत पनि तिथि सम्वत् (लुनार क्यालेन्डर) अर्थात चन्द्रमासमै आधारित थिए । नेपालमा भित्रयाइएका बेला श्री ३ चन्द्र शम्शेरले संवत् मात्रै भित्र्याएको नभई केही ब्राह्मण र ज्योतिष पनि भित्र्याए र त्यसमा गते थप्न निर्देशन दिए । अहिले पनि भारतको राजस्थान राज्यका केही भागहरूमा चन्द्रमासमै आधारित विक्रम संवत् प्रचलनमा छ । अहिले पनि कृष्ण पक्ष, शुक्लपक्ष भन्ने गरिन्छ त्यहाँ । नेपालमा गते थप्ने कामको निर्णय चन्द्र शमसेरको पालामा भए पनि गते थपेर सरकारी कामकाजमा प्रयोगमा ल्याउने काम भने भीम शमसेरको पालामा भएको कुरा प्रो. माणिक लाल श्रेष्ठले उल्लेख गर्नुभएको छ । यसरी विक्रम संवत चलाउनुको पछाडि कुनै राष्ट्रिय भावना देखिँदैन । साँच्चै नै राष्ट्रिय भावना वा एकतालाई महत्व दिन चाहेको भए नेपाल संवत्मै पनि गते थप्न सकिन्थ्यो ।

नेपालमा नेपाल संवत् प्रयोगमा ल्याउनु पर्छ भनिरहँदा सबैको मनमा उब्जने प्रश्न भनेको कसरी प्रयोगमा ल्याउने भन्ने हो । त्यसका बारेमा अहिले विभिन्न चर्चा परिचर्चा हुने गरेको छ । पहिलो कुरा नेपालमा यो स्तरीय छैन, वैज्ञानिक छैन भनेर प्रश्नहरू उठाउने गरिएको छ । नेपाल संवत्को ऐतिहासिकता, वैज्ञानिकता र व्यावहारिकताका बारेमा संवत्माथि उठ्ने उठाइने यी सवाललाई हामीले हल गर्न जरुरी छ । हामीले बुझ्नुपर्ने कुरा के हो भने नेपाल संवत् प्रयोगको इतिहास गरिमामय छ । यो वैज्ञानिक पनि छ । तर स्तरीय छ कि छैन भन्ने सवालमा वहस हुन सक्दछ । सौर्यमासमा आधारित इस्वी सम्वत् पनि कतिपय देशमा पछि सुधारिएकै हो । रुसमा अक्टोवर क्रान्ति जुलियस सिजरले विकास गरेको संवत अनुसार अक्टोबर २५ मा भएको थियो । पछि पोप ग्रेगोरीले परिमार्जित गरेका सौर्यमासमा आधारित पात्रोमा मिलाउँदा अक्टोवर क्रान्ति नोभेम्बर ७ मा पर्न गयो ।

स ा ै य र् म ा स क ा े क्यालेण्डरको सैद्धान्तिक अवधारणा भनेको मेष राशिदेखि १२ राशिको सूर्यको भोगावधि हो, जसको अवधि ३६५.२५ दिन हुन्छ । अर्को भाषामा भन्दा पृथ्वीलाई सूर्यको परिक्रमा पुरा गर्न लाग्ने समय ३६५ दिन र ६ घण्टा हो । त्यसैले सौर्यमासको क्यालण्डर भनेको वर्षमा ३६५.२५ दिनको व्यवस्थापन हो । सौर्यमास पात्रो नै भए पनि विक्रम संवत्मा पनि धेरै खोटहरू छन् । कुन सालमा असारमा ३२ दिन हुन्छ भन्ने कुरा निर्क्योल नहुने मात्र होइन, यसमा अधिक वर्ष ९ीभबउ थ्भबच० कहिले पर्छ भन्ने पनि थाहा हुँदैन । यसको गणना नमिल्दा असोजमा मनाउनुपर्ने चाडपर्वहरू समेत कार्तिकमा पर्न थालि सक्यो । असारे गीत जेठमा गाउनुपर्ने भइसक्यो । त्यसैले विक्रम संवत सुधारका अभियन्ताहरूले अव चाड पर्वहरू १ महिना अगाडी सार्नुपर्ने बताउन थालेका छन् । उहाँहरूको तर्कअनुसार विक्रम संवत २४ दिन ढीला भइसकेका छ । यसरी हेर्दा सौर्यमासको क्यालेण्डरमा पनि सुधार आवश्यक छ ।

अर्को कुरा चन्द्रमासको तिथि संवतमा सौर्यमासको गते थप्दा आउने समस्याहरू पनि ज्यूँका त्युँ छन् । विक्रम संवतमा चन्द्रमासको तिथिसँगै सौर्यामासको गते थपेर प्रयोग गर्दा यस संवत्मा कुनै वर्ष चैत दशैं नै नहुने, कुनै वर्ष २ पटक चैत दशैं पर्ने समस्या पनि छ । त्यहि भएर होला सायद भारतले सरकारी कामकाजमा इश्वी संवत प्रयोग गर्ने गरेको छ । चीनले पनि आफ्नो राष्ट्रिय संवतमा सौर्यमासको तरिख वा गते नथपी इश्वी संवत नै प्रयोग गर्ने गरेको छ ।

प्रत्येक ४ वर्षमा १२ महिनाको सट्टा १३ महिना हुने अधिक मासको समस्या त कुनै पनि चन्द्रमासको क्यालेण्डरमा हुन्छ नै । यसको कुनै हल निकाल्न सकिँदैन । किनकि चन्द्रमासको क्यालण्डरको सैद्धान्तिक अवधारण सौर्यमासको भन्दा फरक छ । चन्द्रमा पृथ्वीको एक मात्र उपग्रह हो । यसले सूर्यको विपरीत पृथ्वीको फन्को मार्दछ । यसले हरेक २७.३ दिनमा पृथ्वीको परिक्रमा पुरा गर्छपैथ्वीको गिरुत्वाकर्षण शक्तिले चन्द्रमालाइ प्रभाव पारिरहेको हुन्छ । प्रत्येक २९.५ दिनमा चन्द्रमा पुनः यथास्थितिमा फर्किन्छ । चन्द्रमासको संवत चन्द्रमाको यहि घुम्ने चालमा आधारित हुन्छ । यसरी हेर्दा १ वर्षमा २ ९.५ गुणा १२ बराबर ३५४ दिन हुन्छ । त्यसैले प्रत्येक ४ वर्षमा अधिक मास हुन्छ । यो कुरा विज्ञानसंगत कुरा नै हो । यहि कारणले प्रायजसो देशहरूमा सरकारी कामकाजमा चन्द्रमासको संवतभन्दा सौर्यमासको संवत प्रयोग हुन थालेको हो ।

चीनमा आफ्नो चिनियाँ क्यालेण्डर भएपनि उनीहरूले आफ्नो चाडपर्वमा मात्र प्रयोग गर्ने गरेका छन् र सरकारी कामकाजमा इस्वी संवत् नै प्रयोग गर्छन् । भारतमा शक संवत्, विक्रम संवत्लगायत थुप्रै संवतहरू छन् । भारतले शक संवत्लाइ आफ्नो राष्ट्रिय संवत्को मान्यता दिएको छ तर सरकारी कामकाजमा इस्वी संवत् नै प्रयोग गर्ने गरेको छ । नेपालमा सौर्यमास थपेर विक्रम संवत चलाए, तर यो वैज्ञानिक र स्तरीय देखिंदैन ।

आजभोली नेपाल संवत्मा पनि सौर्यमास क्यालेन्डर निकाल्न थालिएको छ । त्यसमा ग्रेगोरियन क्यालेन्डर जस्तै प्रत्येक ४ वर्षमा छैठौं महिना अर्थात चउला (महिना) मा १ दिन थपी अधिक वर्ष मिलाइएको छ । त्यसअनुसार नेपाल संवत्को पहिलो पाँच महिना अर्थात् कछला, थिंला गर्दै चिल्ला सम्मको पाँच महिना ३० दिन हुने, छैठौं महिना अर्थात् चउलामा प्रत्येक वर्ष २९ दिन र ४ ले भाग जाने प्रत्येक वर्ष ३० दिन हुने र सातौं महिना बछला, तछला गर्दै कौलासम्म ३१ दिन हुने प्रबन्ध गरेको छ । यसरी पहिलो ५ महिनाको १५० दिन, छठौं महिनाको २९ दिन र पछिल्लो ६ महिनाको १८६ दिन गरेर ३६५ दिन हुन्छ । अब ४ वर्षमा एकचोटि चौला महिनाको २९ लाई ३० गरिन्छ, त्यसो गर्दा ३६६ दिन हुन्छ । यस हिसाबले प्रत्येक चार वर्षमा त्यसलाई व्यवस्थित गरेर जान्छ । यो गर्नुपर्नाको कारण सूर्यलाई पृथ्वीले परिक्रमा गर्दा लाग्ने ३६५.२५ को जुन पद्धति छ, त्यो अधिक ०.२५ लाई मिलाउन चौथो वर्ष एकदिन बढाइएको हो । यसरी नेपाल संवत्लाई सौर्य मासमा आधारित बनाएर लाने प्रयत्न भएको छ । नेपाल संवतको सौर्यमास प्रणाली पछिल्लो विज्ञान र प्रविधिको प्रयोग गरी विकास गरेकाले विक्रम संवत्भन्दा वैज्ञानिक र स्तरीय देखिन्छ । यसलाई कतिपय व्यवसायीहरूले आफ्नो आन्तरिक कामकाजमा प्रयोग गर्न पनि सुरु गरेका छन् ।

नेपाल संवतको बैज्ञानिकताको जुन सवाल छ, त्यसमा नेपाल संवत्मा वैज्ञानिकता छैन भनेर कसैले पनि भन्न सकिने आधार छैन । विज्ञानले कारण र परिणामको माग गर्छ । चन्द्रमास पद्धतिअनुसार यसका तिथि तय हुन्छ । नेपाल संवत्को पात्रो निर्धारण गर्ने विज्ञहरूद्वारा जुन दिन सूर्यग्रहण हुन्छ भनेका हुन्छन्, त्यो दिन सूर्यग्रहण भएकै छ, जुन दिन चन्द्रग्रहण हुन्छ भनेका हुन्छन्, त्यो दिन चन्द्रग्रहण भएकै छ । त्यस्तै पूर्णिमाको दिनमा झलमल्ल जुन लागेकै हुन्छ र औंशीको दिन रात अन्धकार भएकै छ ।

नेपाल संवतमा तिथिमितिहरू प्रयोग गर्दा हाम्रो देशको संस्कृति, रितिथिति र परम्पराअनुसार चाडपर्वहरूमा तिथि टुट (तुथ) नहुने गरी क्रमशः मनाउने, घडी पला नहेरी दिनभरी एउटै तिथि प्रयोग गर्ने जस्ता सौर्यमासका विशेषताहरूलाई चन्द्रमासकै तिथिमा समायोजन गरी नेपाल संवतको तिथि प्रयोग गर्ने प्रचलन छ । यस्तो प्रवन्ध विक्रम संवतमा छैन । त्यसैले आजभोली स्वन्ति (त्रिहार वा तिहार= लगातार तीन दिन) हुनुपर्ने कहिले एउटै तथि दुई दिन पारी निन्ति (दुईहार) कहिले घडी पला हेरी तिथि टुट भन्दै चार दिन पारी प्यन्ति (चारहार) हुन थाल्यो । यसपटक त सुरु र अन्त्य हिसाव गरी स्वन्ति (तिहार) ५ दिन हुन गयो । नेपाल संवत प्रयोग गर्दा यस्तो समस्या नहोस भन्नाका लागि नै शक संवतको तिथिमितिहरूमा आवश्यक स्तरीयकरणसहित यसलाई प्रयोग गरिएको हो भन्ने यसका विज्ञहरूको दावा रहेको स्पष्ट छ ।

नेपाल संवत् प्रारम्भ हुनुको पछाडि राष्ट्रियताको भावना, लोकतान्त्रिक आन्दोलनसँग जोडिएका इतिहास र सामाजिक परिवर्तनका सन्दर्भहरू पनि छन् । नेपालमा अरु संवत्हरूको प्रयोगमा यस्तो देखिँदैन । हामीले पञ्चायतकालमा शुभकामना आदानप्रदानको कार्यक्रम राख्दा दमन गरी धरपकड र राज्य आतंक सृजना गरेपछि हामी पञ्चायत व्यवस्थाविरुद्ध जानैपर्ने स्थिति बन्यो । हामीले लोकतान्त्रिक आन्दोलनसँग जोडेर यसलाई अगाडि बढायौं ।

राष्ट्रियताका भावना त यो संवत्सँग जोडिएकै छ । यसको नामले त्यसलाई प्रतिविम्बित गर्छ र अन्तर्राष्ट्रिय समुदायमाझ पनि चिनिएकै छ । संयुक्त राष्ट्र संघमा नेपालले सदस्यता प्राप्त भएको बखत भामरतको भन्ला फरक नेपालको मौलिकता झल्काउने माध्यमको रूपमा यहाँको मौलिक संस्कृति, लिपि, संवत आदि प्रस्तुत गर्नुपर्ने परिस्थिति सृजना भएको थियो । त्यसको एउटा साधन संवत पनि थियो । नेपालमा लोकतन्त्र बहाली भई २०१५ सालको पहिलो आम निर्वाचपश्चात २०१६ सालमा विश्वेश्वर प्रसाद कोइराला प्रधानमन्त्री भए । त्यसपश्चातको लोकतान्त्रिक वातावरणमा संयुक्त राष्ट्र संघका साथै विभिन्न कूटनीतिक नियोगहरूमा नेपाली प्रतिनिधिहरूको पहलमा नेपाल संवतको पहिलो दिन 'नेपाल डे' भनेर मनाउन सुरु भएको थियो । वास्तवमा नेपाल संवतले नेपालको पहिचान स्थापित गर्न मद्दत गरेको पनि थियो । तर नेपालमा जब नेपाल भाषा मंकाः खलःको स्थापना गरी २०३६ सालबाट नेपाल संवत्को शुभकामना आदानप्रदानको भिंतुना जुलुश कार्यक्रम अगाडि बढाइएपछि त्यसमा केही पूर्वाग्रह साँधियो र विविध बहाना बनाएर २०३८ साल (नेपाल संवत् ११०२) तिर आएर संयुक्त राष्ट्र संघ लगायतका कुटनीतिक नियोगहरूमा 'नेपाल डे' मनाउने परम्परा तत्कालीन पञ्चायती सरकारले गऱ्यो ।

नेपाल संवत्मा राष्ट्रियताको भावना साथै सामाजिक परिवर्तनको भावना पनि प्रचुर मात्रामा छ । जस्तो कि ऋणमोचन जस्तो लोक कल्याण, सामाजिक न्याय र परोपकारी भावना । आफूले कमाएको सम्पत्तिलाई प्रयोग गरेर सम्पूर्ण जनतालाई ऋण मुक्त बनाएर शंखधर साख्वाःले नेपाल संवत् सुरु गऱ्यो । साख्वाः भन्ने शब्द संस्कृतको साखवालबाट आएको देखिन्छ । इतिहासकार भूवनलाल प्रधानका अनुसार साखवाल भनेको ऋण लिने दिने एउटा आर्थिक कारोवार गर्ने समुदाय हो । यसलाई अंग्रेजी भाषामा क्रेडिटर भन्न सकिन्छ । आधुनिक बैंकिंग प्रणाली सुरु नभएको बेला लेनदेन गर्ने सबै कामहरू यिनीहरूबाटै हुने गर्थ्यो । एकजना परोपकारी भावना भएका र व्यापार विनियममा लाग्ने व्यक्तित्वले आफूले कमाएको धनसम्पत्तिबाट ऋणमोचन गरी सम्पूर्ण जनताको ऋणमोचन गरी आर्थिक दासताबाट मुक्त गरेर यो नयाँ संवत् शुरु गरेको हो । त्यसैले नेपालमण्डालका तत्कालीन मूल राजा राघवदेवले आफ्ना जनताको भलो हुने देखी इस्वी संवत् ८७९ अक्टोवर २० का दिनदेखि सम्पूर्ण तिथिहरू शक संवत् र मानदेव संवत्कै प्रयोग हुने गरी त्यसलाई यथावत नै राखेर कछलाथ्व पारुदेखि यो संवत् सुरु गरिएको देखिन्छ । यी तथ्यहरूले यो संवत्को गरिमामय इतिहास पुष्ट्याइँ गर्छ ।

नेपाल संवतको गरिमामय इतिहासलाई फेरी पनि पुनर्स्थपित गर्नु पर्छ र शंखध साख्वाःको लोककल्याणकारी भावनालाई अन्तराष्ट्रिय क्षेत्रमा पनि प्रचार प्रसार गर्नु पर्दछ । नेपालमा पनि सबै तहको सरकार र जनस्तरमा यसको प्रयोग गर्नु पर्दछ । यस सन्दर्भमा २०४६ सालको परिवर्तन र २०६२/६३ सालको जनक्रान्तिपश्चात गरिएका निर्णयहरू उल्लेखनीय छन् । तर ती निर्णयहरूको पछाडी नेपाल संवत आन्दोलन को महत्त्वपूर्ण भूमिका रहेको छ भन्ने कुरा भुल्नु हुँदैन । खासगरी २०५६ (नेपाल संवत् ११२०) सालमा तत्कालिन कृष्णप्रसाद भट्टराईको सरकारबाट शंखधर साख्वालाई राष्ट्रिय विभूति घोषणा गर्नु, २०६५ साल (ने.सं. ११२८ मा निर्णय गरी ११२९ को न्हूदँको दिन घोषणा) मा तत्कालिन प्रधानमन्त्री पुस्पकमल दाहाल प्रचण्डद्वारा राष्ट्रिय मान्यताको घोषणा गर्नु र २०४४ साल (ने.सं. ११४४) मा सरकारी कामकाजमा प्रयोग गर्ने निर्णय भई कार्यान्वयनमा लानु महत्त्वपूर्ण निर्णय हो ।

त्यसरी नै बागमती प्रदेश सरकार र काठमाडौँ, ललितपुर लगायतका केही स्थानीय सरकारहरूले पनि नेपाल संवतलाई प्रयोगमा ल्याइसकेको छ । त्यसैले प्रत्येक नेपालीहरू, जो न्याय, स्वतन्त्रता, समानता र परिवर्तनका हिमायती छन्, सबैले यसमा गर्व गर्नु पर्छ । यसको मुख्य कारणहरूमाः पहिलो, नेपाल संवत् मौलिक संवत् हो । दोस्रो, यो कुनै देवी देवता, धर्मगुरु वा राजा महाराजाको नाममा स्थापित संवत् होइन । तेस्रो, यो संवत्सँग जनतालाई आर्थिक दासताबाट मुक्त गराएको गौरवमय जनश्रुति गाँसिएको छ । चौथो, यो संवत् स्थापना भएको बेलाका राजा राघवदेव स्वयं पनि यस संवत्का संस्थापक शंखधर साख्वाःको देशप्रेम, परोपकारी भावना र ऋणमोचनजस्तो पवित्र कार्यबाट प्रभावित भएर यो संवत् प्रचलनमा ल्याउन स्वीकृति प्रदान गरिनु आदि ।

अन्तमा नेपाल संवत्का प्रवर्तक हाम्रा राष्ट्रिय विभूति शंखधर साख्वाःप्रति हार्दिक सम्मान प्रकट गर्दछु । नेपाल संवत्को नयाँ वर्ष ११४५ भव्य रूपले मनाऔं, राष्ट्रिय एकता प्रकट गरौं । देशभित्र र विदेशमा फैलिएर रहेका सबै नेपालीहरूलाई म हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछु ।

(पूर्वमन्त्री राजेन्द्रप्रसाद श्रेष्ठ न्हूदँ ११४५ राष्ट्रिय समारोह समितिका अध्यक्ष हुनहुन्छ ।)

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# भक्तपुरकी आयोना लाखा ललितपुरमा सम्पन्न नृत्य प्रतियोगितामा प्रथम

काठमाडौं । ललितपुर महानगरपालिका १६ वडा कलाकार समितिद्वारा नेपाल सम्बत ११४५ नव बर्ष, स्वन्तीको उपलक्ष्यमा आयोजित भएको नृत्य प्रतियोगिता (दोश्रो सिजन)मा गोमारीकी आयोना लाखाले प्रथम पुरस्कार प्राप्त गर्न सफल भएको छ । विजयी लाखाले फाइनल राउण्ड मा १४ प्रतिस्पर्धीलाई पछि पार्दै प्रथम स्थान हासिल गरेको हो । उनले शिल्ड, प्रमाणपत्रसहित नगद रु ५० हजार प्राप्त गरेको छ ।

प्रतियोगितामा चाकुपात, ललितपुरका इभान धाख्वा द्वितीय, काय्गुनिनि, ललितपुरकी लक्कि महर्जन तृतीय तथा न्याखाचुक, ललितपुरकी उत्पला बज्राचार्यले सान्त्वना पुरस्कार जितेको छ । उनीहरुले शिल्ड, प्रमाणपत्रसहित नगद पुरस्कार क्रमशः ३० हजार, १५ हजार र ५ हजार जितेका हुन ।

ललितपुरको सांस्कृतिक महत्वको दबली कात्तिदबूमा भएको सो कार्यक्रममा विशिष्ट कलाकार लोकगायक रत्न बेहोशी बज्राचार्यलाई "ललितरत्न" उपाधि प्रदान गर्दै सम्मान गरिएको थियो । कला क्षेत्रमा जीवन अर्पण गरेका बज्राचार्य ललितपुरको रत्न भएको उल्लेख गर्दै दोसल्ला ओढाई सम्मान पत्र प्रदान गरिएको थियो भने यस बर्ष नगद १५ हजार पनि थप गरिएको हो । प्रथम पटक यो सम्मान वरिष्ठ कलाकार मोहनप्रसाद जोशीलाई प्रदान गरिएको थियो भने यो बर्ष वरिष्ठ कलाकार बज्राचायलाई प्रदान गरिएको हो । ललितपुर महानगरपालिका १६ वडाका अध्यक्ष निर्मलरत्न शाक्यको सभापतित्व तथा, वडाको कलाकार समितिका संयोजक सुरजबीर बज्राचार्यको सह-सभापतित्वमा भएको उक्त कार्यक्रममा जनसंगीत श्रष्टा अमरराज शर्मा राजोपाध्यायको प्रमुख आतिथ्यता रहेको थियो ।

कार्यक्रममा संघीय सांसद प्रेमबहादुर महर्जन, ललितपुर महानगरपालिकाकी उपप्रमुख मञ्जली शाक्य बज्राचार्य, प्रदेश सांसद रामकृष्ण चित्रकार, १६ वडा सदस्य एवं कार्यपालिका सदस्य बबिता श्रेष्ठ, राष्ट्रिय उपभोक्ता मञ्चका अध्यक्ष प्रेमलाल महर्जन, नृत्य निर्देशक संघ नेपालका अध्यक्ष भूवनदास श्रेष्ठ, वरिष्ठ कलाकारहरु नारायणदेवी प्रधान, राधेश्याम प्रधानलगायतको उपस्थिति रहेको थियो । निर्णायक मण्डलमा कलाकारहरु संजय शर्मा राजोपाध्याय, स्वजन रघुवंशी र श्रृष्टि महर्जन रहेको थियो भने २३ प्रतिस्पर्धीबाट उत्कृष्ट १५ को छनौट कार्य कलाकारहरु मिनर्वा शर्मा राजोपाध्याय र राजिप बज्राचार्यले गरेको थियो । कलाकार समितिले नव कलाकारहरुका लागि अवसर एवं प्रशिक्षण, यस पुस्ताका सक्रिय कलाकारहरुका लागि मञ्च तथा वरिष्ठ कलाकारहरुका लागि सम्मान कार्यक्रम गर्दै आएको छ ।

पाँच बर्षदेखि सक्रिय यस समितिमा सचिव अनुप शाक्य, कोषाध्यक्ष सलोना बज्राचार्य तथा सदस्यहरुमा भूपेन्द्र बज्राचार्य, अमर चित्रकार, निल शाक्य, अमोघवीर बज्राचार्य, मोहिद्दिन खान, श्रुयति शाक्य, चनिरा बज्राचार्य र राधिका श्रेष्ठ रहेको छ ।

# चक्रपाणि कथा प्रतियोगितामा उत्कृष्ट पाँचले पाए पुरस्कार

भक्तपुर । "चक्रपाणि" कथा प्रतियोगिताको नतिजा सार्वजनिक गरिएको छ । चक्रपाणी स्मारक प्रतिष्ठानले मंगलवार प्रतियोगिताको नतिजा सार्वजनिक एवं पुरस्कार वितरण कार्यक्रम सम्पन्न गरेको हो । कथा प्रतियोगितामा जाजरकोटका युवा कथाकार शिवराज शाहीको कथा "सन्तानको फोटो"ले प्रथम पुरस्कार जितेको छ । उनले प्रमाणपत्र संगै रु ३० हजार नगद पुरस्कार प्राप्त गरेका छन् । जोशीको कथा सन्तानको फोटोमा संसारभरि बढीरहेको बुढ्यौली, निर्जन बन्दै गएको गाउँबस्ती र बौद्धिक पलायनले जर्जर नेपालको जीवन्त कथा बोकेको प्रतिष्ठानले जनाएको छ । लौहकिल्थली भक्तपुरका मनीषकुमार शर्मा 'समित' को "मैले नभित्राएकी बुहारी"ले द्वितीय पुरस्कार प्राप्त गरेको छ । उनले नगद रु २० हजारसंगै प्रमाण पत्र प्राप्त गरेका छन् । त्यसैगरी रुपक अलंकार को कथा "बङ्गाली बाबा"ले तृतीय पुरस्कार प्राप्त गर्न सफल भएको छ । उनले प्रमाण पत्रसंगै नगद रु १० हजार प्राप्त गरेका छन् ।

प्रतियोगितामा तनहुँका प्रतियोगी प्रकाश नेपालीको कथा "मेलम्ची कहिले सुक्छ सरकार" र अनिता पन्थीको "जुगुप्सा" ले रु. ५ हजार राशीसहितको "आरुषी महर्जन" गुणवत्ता पुरस्कार प्राप्त गरेका छन् । कथा प्रतियोगितामा वरिष्ठ कवि शैलेन्द्र साकार, कथाकार इस्माली(महेश्वरप्रसाद उपाध्याय) र समालोचक डा. बिन्दु शर्मा त्रयले निर्णायकको भूमिका निर्वाह गरेको आयोजक चक्रपाणी स्मारक प्रतिष्ठानले जनाएको छ । निर्णायक रहेकी समालोचक डा बिन्दु शर्माले प्रतियोगितामा ६६ कथा सहभागी रहेका र आफूहरुले कथाकारको नाम नहेरी मूल्यांकनका मापदण्डअनुरुप निर्णय गरेको जानकारी गराइन ।

प्रतियोगितामा प्राप्त प्राप्ताङ्कका आधारमा उत्कृष्ट ३० कथालाई चक्रपाणि कथा विशेषाङ्कमा समेटिएको प्रतिष्ठानका सदस्यसचिव रामगोपाल आशुतोषले जानकारी दिएका छन् । कवि आशुतोष चक्रपाणि कथा विशेषाङ्कको कार्यकारी सम्पादकसमेत हुन् ।

कार्यक्रममा समालोचक एवं साहित्यकार प्राडा गोविन्दराज भट्टराईलाई यस वर्षको चक्रपाणी स्मारक पुरस्कार प्रदान गरिएको छ भने एसईईमा सूर्यविनायक नगरभित्रबाट नेपाली विषयमा सर्वोत्कृष्ट ४ जीपीए ल्याउने दुई विद्यार्थीलाई बैजनाथ-सुभद्रा प्रोत्साहन पुरस्कार पनि प्रदान गरिएको छ । पुरस्कृत हुनेमा मोर्डन बोर्डिंग स्कुलकी छात्रा बुमिरा माकजू र युनिक इण्टरनेशनल स्कूलका छात्र विकास थापा रहेका छन् ।

प्रतिष्ठानका अध्यक्ष राममणी ढुंगेलको अध्यक्षतामा सम्पन्न साहित्यकार चक्रपाणि चालिसेको १४२ औं जन्मजयन्ती समारोह, पुरस्कार वितरण एवं साहित्यिक कार्यक्रममा नेपाल सरकारका पूर्व सचिव एवं सिमाविद द्वारिकानाथ ढुंगेलको प्रमुख आतिथ्यता रहेको थियो । डा कुमार कोइराला, प्राडा गोविन्दप्रसाद भट्टराई शैलेन्द्र साकार, डा बिन्दु शर्मा, वडाध्यक्ष राजकुमार जोशी, नेपाल पत्रकार महासंघ भक्तपुरका अध्यक्ष जगत प्रजापति लगायतको उपस्थित रहेको थियो ।

सो अवसरमा सूर्यविनायक-५ कटुन्जेको चक्रपाणी चोकस्थित साहित्यकार चक्रपाणी चालिसेको स्मारक अघि उभिएर वरिष्ठ कवि शैलेन्द्र साकार, पदम दाहाल युवा कवि सुरेश गाउँले, सञ्जय सुमन, दिलकुमारी डङ्गोल, वसन्त नकर्मी, तेजकुमार श्रेष्ठ, रेणुका भट्टराई, ज्ञानु विद्रोही र राजेश केसीले कविता वाचन समेत गरेका थिए ।

# नेवाः शर्टफिल्म "नखत्या"ले जित्यो दक्षिण कोरियामा पुरस्कार

काठमाडौं । नेपालभाषाको म्युजिक भिडियो क्षेत्रमा स्थापित निर्देशक बिश्वास बज्राचार्यको परिकल्पना र निर्देशनमा तयार भएको नेपालभाषाको शर्टफिल्म "नखत्या" दक्षिण कोरियामा सम्पन्न भएको सिउल इन्टरनेशनल किड्स एन् युथ फिल्म फेस्टिभलमा पुरस्कार जित्न सफल भएको छ । यो शर्टफिल्मको निर्माणसंग सम्बद्ध सुत्रले जानकारी दिए अनुसार यो शर्टफिल्मंले सिउलमा "सिल्भर लाइट" प्राइज जितेको हो । यो शर्टफिल्म तयार गर्न आफ्नो टिमले मिहेनत गरेको क्षणलाई सम्झँदै निर्देशक र परिकल्पनाकार बिश्वास बज्राचार्यले यो जित आफ्नो टिमको मात्र नभई सम्पुर्ण नेपाली फिल्म उद्योगको सफलता भएको बताए ।

यो नखत्या शर्टफिल्म ज्योति म्युजिकको अफिसियल युट्युब च्यानलमा अपलोड गरिएको छ । यो शर्टफिल्ममा रवि डंगोल, अर्णेश्वरी शिल्पकार, विशम राज शाक्य , इभेन्जिला तुलाधर, निकि बज्राचार्य, सरिता शिल्पकार, रबिना तुलाधर, सिताराम माक लगायतका कलाकारहरुको अभिनय रहेको छ । यसको छायाँकार आकृष्ट शाक्य र सम्पादक बिजनराज बज्राचार्य हुन् ।

# नेटफ्लिक्स सिरिज "स्क्वाड गेम" सिजन २ को ट्रेलर सार्वजनिक

NETFLIX
SEASON 2 TRAILER
SQUID GAME 2

काठमाडौं । नेट्फ्लिक्सले बहुप्रतीक्षित सिरिज 'स्क्वाड गेम' सिजन २ को ट्रेलर सार्वजनिक गरेको छ । विश्वब्यापी पर्खाइबीच सार्वजनिक ट्रेलरले दर्शकलाई उत्सुकता जगाउने पक्का छ । यसमा पनि ४५६ जना खेलाडी ज्यान जोखिममा हालेर खतरनाक एरिनामा भिड्न तयार छन् ।

बाल खेलहरूको घातक श्रृंखला जितेको ३ वर्षपछि सियोङ जि-हुन पुनः नया खेलका लागि मैदानमा फर्किएको छ । यसपटक उनी सयौं नयाँ प्रतिद्वन्द्वीसँग सामेल भएको र उनीहरुलाई सुरक्षित तुल्याउनेतर्फ लागेको छ । उक्त पात्रको भूमिकामा ली जंग-जेले अभिनय गरेका छन् ।

दक्षिण कोरियाको यो बहुचर्चित वेब-सिरिजले ४५६ व्यक्तिलाई पछ्याएको थियो जो ऋणमा डुबेर निराश थिए । ऋण तिर्ने उद्देश्यले ठूलो नगद पुरस्कार जित्न उनीहरु मृत्युसँग पैठेजोरी खेल्छन् ।

स्ट्रिमिङको २८ दिनमै यसलाई १११ मिलियन दर्शकले नेटफिल्क्समा हेरेका थिए । नेटफ्लिक्सको यो सबैभन्दा धेरै हेरिने सिरिज बनेको थियो । डरलाग्दो मास्क लगाएका गार्डहरूले प्रतियोगितामा पात्रहरूको नयाँ कलाकारलाई स्वागत गर्दै ट्रेलर सुरुवात हुन्छ ।

तिनीहरूलाई रेड लाइट र ग्रीन लाइटसहितको आफ्नो पहिलो खेलको लागि पठाइएको छ जुन सिजन एकबाट पनि परिचित छ । खेलमा ठूलो मेकानिकल पुतलीको पछाडि फर्किएको बेलामा खेलाडीहरूले अन्तिम रेखा तर्फ अघि बढ्नुपर्छ । नत्र हानेर मारेको देखिन्छ ।

जि-हुन मात्र सिजन एकको खेलमा बाँचे । यसपटक उनी आफूलाई फिनिस लाइनमा लैजाने प्रयत्न गर्दै र वरपरका खेलाडीलाई सुरक्षित तुल्याउन प्रयास गरेको देखिन्छ । दोस्रो सिजन डिसेम्बर २६ देखि स्ट्रिमिङ सुरु हुनेछ ।

तेस्रो तथा अन्तिम सिजन सन् २०२५ मा रिलिज हुने नेटफ्लिक्सले जनाएको छ ।











प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स
THIMI TIMES WEEKLY
साप्ताहिक



वर्ष १८ | अङ्क १५ | ने.सं. ११४५ कछलाथ्व द्वादशी | कार्तिक २८ गते बुधबार, २०८१ | 13 Nov. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

# नेपालको राजनीति नैतिकता गुमाउँदै क्षयीकरणको बाटोमा




काठमाडौं । देशमा अहिले संसदमा पहिलो र दोस्रो स्थानमा रहेको राजनीतिक दल नेपाली कांग्रेस र नेकपा एमालेको गठजोड रहेको सरकारको नेतृत्व केपी शर्मा ओलीले गरिरहेको छ । संसदको तेस्रो दलको रुपमा रहेको नेकपा माओवादी कमजार प्रतिपक्षको रुपमा रहेको छ । नेकपा माओवादीले नेकपा एमाले र नेपाली कांग्रेसलाई साथमा लिएर केहीं समय सत्ताको नेतृत्व सम्हाल्न पाएका थिए । तर नेकपा एमाले अध्यक्ष केपी शर्मा ओलीको प्रधानमन्त्री मोह र सत्ता लिप्साका कारण नेपाली कांग्रेससंग मिलेर सत्तामा आधा आधाको भागबण्डा गर्दै शासन संचालन गर्ने सहमती अनुसार अहिलेको सरकार बनेको हो ।

यो सरकार बनेदेखि नै राजनीतिक विश्लेषकहरुले संसदमा रहेको सबैभन्दा ठूला दल संसदमा कमजोर प्रतिपक्ष रहेको अवस्थामा सरकार बनाउन नैतिक रुपले पनि नहुने भन्दै आलोचना भएको थियो । तर दुई ठूला दलले सत्तामा भागबण्डा गर्दै सरकार गठन गरेको १०० दिन बित्दा सम्म सरकारले नेपाली राजनीतिमा जनता र देशको लागि कुनै ठोस कार्य गर्न नसकेको भन्दै आलोचना गरिरहेको छ । यही समय सरकारको नेतृत्व गरेको एमाले पार्टी अझै विवादमा पर्दै गएको छ । नेकपा एमालेमा अहिले दल बाहिरबाट भन्दा पनि दल भित्रैबाट पार्टीको विवादास्पद पार्टी नीति जग्गा दानको विषयमा आलोचना भइरहेको छ । तर नेकपा एमालेको नेतृत्व तह भने दल भित्रकै विवादलाई दवाउने रणनीतिमा लागेको छ । एमाले अध्यक्ष तथा सरकारको प्रधानमन्त्रीसमेत रहेका ओलीले राजधानीमा आयोजित हाँस्य टोली सिस्नो पानीको कार्यक्रममा देशमा रहेका सबै राजनीतिक दलले व्यापारीको दान लिने गरेको र व्यापारीकै रकम उठाएर निर्वाचन जित्न पर्ने बाध्यता दलको रहकोले अप्रत्यक्ष रुपमा आम जनचासोको विषयमा सोच्न नसकिने बिचार घुमाउरो पारामा व्यक्त गरेका छन् । यसबाट राजनीतिक दलको नीति जनहितमा भन्दा पनि व्यापारी पोस्ने र जनविरोधी कार्यको पक्षपोषण गर्ने नीति रहेको आंकलन गर्न सकिन्छ । यसले राज्यसंयन्त्र थाम्ने राजनीतिक क्षेत्रले पछिल्लो समय नैतिकता गुमाउँदै क्षयीकरणको दिशामा अघि बढ्दै गएको आशंका उब्जिएको छ । नक्कली भूटानी शरणार्थी काण्ड हुँदै ठूलो मात्रामा सुन तस्करी, सहकारीको ठूलो रकम घोटाला, अर्बौंको जग्गासहित भवन दानमा लिनेदेखि पछिल्लो समय कोशी प्रदेशका तत्कालीन कानुन मन्त्री मानव तस्करीमा मुछिएका घटना सबै प्रभावशाली तथा जनमत बटुलेर सत्ता सञ्चालन गर्ने वा सत्ता वरिपरि रहने दलका नेताहरु नै हुन् । यो राजनीतिले डरलाग्दो गरी क्षयीकरणको बाटो समाएको उदाहरण हो ।

अझ सहकारी ठगी काण्डमा मुछिएका राष्ट्रिय स्वतन्त्र पार्टीका अध्यक्ष रवि लामिछाने हिरासतमै रहेका र प्रहरी अनुसन्धान चलिरहेका बेला उपाध्यक्षहरूले उनी जिउँदो रहेसम्म अध्यक्ष रहिरहने ऐलान गर्नुले राजनीतिमा अब नैतिकता नरहने घोषणा गर्दा फरक नपर्ने स्पष्ट गरेको छ । प्रजातन्त्रलाई मूल नीति बनाएको बताउने कांग्रेस, जनताको बहुदलीय जनवादलाई मियो बनाएर अघि बढेको बताउने एमाले तथा जनवाद वा समाजवाद र नागरिक स्वतन्त्रतालाई पार्टी प्राणनीति बनाएको बताउने माओवादी केन्द्रका नेताहरु मानव तस्करी, सुन तस्करी, भ्रष्टाचारीबाट जग्गा प्राप्तिदेखि अनेकौं गलत काममा संलग्न भइरहनु व्यक्तिगत नैतिक विचलन मात्र हुँदै होइन । यो समग्र राजनीतिक दलको नैतिक विचलन हो । अर्को, पछिल्लो समय भ्रष्टाचारी सिध्याउने घोषणा गर्दै राजनीतिमा आएको रास्वपाका अध्यक्षको डरलाग्दो सहकारी घोटाला र अन्य नेता, कार्यकर्ताको उनलाई कानुनी कारबाहीको दायरामा ल्याउनुहुन्न भन्ने अभिव्यक्ति र व्यवहारलाई हेर्दा नेपालको राजनीति सही र नैतिक बाटोमा छैन भन्ने कुरा स्पष्ट हुन्छ ।

अनुसन्धान नै नगरिन सक्छ, अनुसन्धान फितलो बनाइएला, कसैमाथि राजनीतिक प्रभावका कारण अनुसन्धान नै नगरिएला, अदालतले प्रयाप्त प्रमाण नभएको भनेर मुद्दा त्यत्तिकै टुंग्याइदेला तर भूटानी शणार्थी काण्डमा कांग्रेस र एमालेका वरिष्ठ नेताले मानव तस्करी र मानवताविरोधी अपराध गरेकै हुन् । कुनै रुपमा पनि जनताको आँखामा चोखिने ठाउँ छैन । त्यो मुद्दालाई कमजोर बनाउँदै लगियो, राजनीतिक क्षेत्रको नैतिक पतनमा त सुधार आएन । अर्को ठूलो सुन तस्करीमा डरलाग्दो गरी माओवादी केन्द्रका वरिष्ठ नेता संलग्न भएको कुरा कतैबाट लुक्न सक्दैन । अनुसन्धानमा ढिलाइ, प्रमाण

बाँकी पेज ७ मा

## शंखधर साख्वाःको प्रतिमामा माल्यार्पण तथा दिपप्रज्वलन कार्यक्रम सम्पन्न



काठमाडौं । मध्यपुर थिमि नगरपालिकाको आयोजनामा कार्तिक २६ गते अर्थात् कछलाथ्व दशमीका दिन शंखधर दिवसको अवसर पारेर नेपाल सम्वतका प्रवर्तक शंखधर साख्वाःको प्रतिमा स्थल शंखधर चोक परिसरमा दिपप्रज्वलन एवं शंखधर साख्वाःको प्रतिमामा माल्यार्पण कार्यक्रम सम्पन्न गरेको छ । कार्यक्रम हरेक वर्ष नेपाल संवत्का प्रवर्धक शंखधर साख्वालाई नेपाल सरकारले राष्ट्रिय विभूती घोषणा गरेको दिन नेपाल संवत् अनुसार

बाँकी पेज ७ मा

## आदिवासीलाई जोखिममा पार्दै कार्वन व्यापारबाट प्राप्त लाभको हर्षबढाई

काठमाडौं । नेपालले कार्वन व्यापारबाट एक अर्व ६० करोड रुपैया हात पारेको समाचार अहिले सनसनीपुर्ण खबर बनेकोछ । तराइका १३ जिल्लाका वनजंगलबाट कार्वन उत्सर्जन घटाएर कार्बन सन्चिति बढाए बापत विश्व बैकले सो रकम नेपाललाई भुक्तान गरेको हो । यसरी रकम प्राप्त गरेपछि सरकारी तथा गैह्र सरकारी पक्षमा हर्षबढाइँ गर्ने क्रम बढेको छ । सफलताको कथाका रुपमा यस घटनालाई प्रचार गरिँदैछ ।

नेपालले तराई भूपरिधि कार्यक्रम तराईका १३ जिल्लाहरुमा सन् २०१८ बाट नै सञ्चालन गर्दै आएको थियो । बागमती नदीबाट पश्चिम महाकाली नदीसम्म सञ्चालन भएको सो कार्यक्रमले छ बर्षमा दुई दशमलब चार मिलियन टन कार्बन सन्चिति गरे बापत सो भुक्तानी प्राप्त गरेको समाचार हरुमा उल्लेख छ । प्रतिटन कार्बनको पाँच अमेरिकी डलरका दरले भुक्तानी पाउने गरी सो परियोजना बिश्व बैकसंग सम्झौता भएको थियो ।

अन्तराष्ट्रिय कानुन अनुसार कार्बन व्यापारबाट प्राप्त हुने रकम स्थानीय लाभग्राही आदिवासी जनजाति समुदायमा खर्च गर्नू पर्ने प्रावधान रहेको छ । तर नेपालमा आदिवासी जनजातिलाई लाभग्राहीका रुपमा गणना गर्ने गरिएको छैन ।

तराई भूपरिधि कार्यक्रम सञ्चालन हुने क्षेत्रहरु आदिवासी

बाँकी पेज ६ मा



## सहकारीमा हैन, साहुकारीमा समस्या छ

केदार न्यौपान

सहकारीमा अहिले धेरै समस्या देखिएका छन् । सहकारी ऐन बनाउँदा नै नीति निर्माताहरूले यस्तो समस्या आउला भनेर परिकल्पना गरेजस्तो मलाई लागेन ।

सहकारी संस्थाहरूको परिचालन गरेर विकास भएका देशहरू पनि विश्वमा उत्तिकै छन् । जापानको विकास पनि सहकारीको आधारमा नै भएको जस्तो लाग्छ । कोरिया र इजरायलको विकास पनि सहकारीको आधारमा नै भएको हो । साथै, अरु युरोपियन देशहरूको विकासको आधार पनि सहकारी नै हो । हाम्रो देशमा भने त्यसो हुन सकेन ।

हाम्रो देशमा पनि सबै सहकारीमा समस्या छैन । राम्रो काम गर्ने सहकारीहरू पनि छन् । हामीले खाने दूध सहकारी मार्फत् नै संकलन भएको छ । तरकारीका सहकारी छन् । मौरीपालनका सहकारी छन् । तर, सबैभन्दा ठूलो समस्या बचत तथा ऋणको कारोबार गर्ने सहकारीमा देखिएको छ । त्यसमा राम्रा पनि छन् ।

संविधानले तीनखम्बे अर्थनीति भनेको छ । जसमा सरकार, निजी क्षेत्र र सहकारी पर्छ । सरकारी र निजी खम्बा पुराना पनि छन् र बलिया पनि छन् । सहकारी खम्बा नयाँ पनि भएको हुनाले कमजोर पनि छ । यी तीनवटा खम्बाको समन्वयमा आर्थिक विकास हुन्छ र समृद्धि प्राप्त हुन्छ भनेर संविधानले सोचेको छ ।

संविधान र कानूनले सहकारी क्षेत्रमा यस्तो किसिमको समस्या सिर्जना होला भन्ने विषयमा सोचेको छैन । यस्तै, ठूलो किसिमको समस्या आउने हो भने संविधानमा भएको तीन खम्बे अर्थनीति जुन छ, त्यसलाई पनि पुनःपरिभाषित गर्नुपर्ने हो कि ? हामीले फेरि सोच्नुपर्ने हो कि ? वा अर्को ढंगले अगाडि बढ्नुपर्ने हो कि भन्ने पनि देखिन्छ ।

### राजनीतिकरण

सहकारी यस्तो क्षेत्र भएको छ कि यो क्षेत्रमा धेरै मानिसहरू संलग्न भएका छन् । सहकारीकै संख्या ४० हजार भन्दा बढी छन् भन्ने सुनिन्छ । सहकारी हरेक क्षेत्रमा पुगेको छ । सहकारीसँग नजोडिएको मान्छे कमै छ ।

दलीय राजनीतिमा पनि जहाँ बढी मान्छे छन्, त्यहाँ बढी भोट छ । जसले गर्दा राजनीतिक पाटीहरूको पनि त्यसमा ध्यान गएको छ । यसले गर्दा हरेक राजनीतिक पार्टीले सहकारी विभाग खोलेका छन् ।

बाँकी पेज ७ मा

# नेकपा माओवादी केन्द्रले टुंगयायो उपचुनावका उम्मेदवार




काठमाडौं । सरकारमा प्रमुख प्रतिपक्षी दलको रुपमा रहेको नेकपा माओवादी केन्द्रले आगामी उपचुनावका लागि उम्मेदवारहरुको टुंगो लगाएको छ । नेकपा माओवादी पार्टीको पदाधिकारी बैठकले सिफारिस भएर आएका उम्मेदवारहरुको टुंगो लगाएको हो ।

माओवादले सुशासनको अभियानकै रुपमा यो चुनाव अघि बढाउने निर्णय गरेको उपमहासचिव हरिबोल गजुरेलले बताए । चुनावअघि माओवादीको केन्द्रीय समिति बैठक नबसेपनि शीर्ष नेताहरुलाई अनुकुलता अनुसार हरेक पालिकामा खटाउन पालिकाका सम्मेलनहरु गर्ने र ती सम्मेलनलाई खबरदारी सभाका रुपमा समेत अघि बढाउने माओवादीको तयारी छ ।

अध्यक्ष पुष्पकमल दाहाल ‘प्रचण्ड’ निवास खुमलटारमा सोमबार बिहान बसेको पदाधिकारी बैठकले सातै प्रदेशबाट सिफारिस भएर आएका उम्मेदवार अनुमोदन गरेको प्रवक्ता एवं उपाध्यक्ष अग्निप्रसाद सापकोटाले जानकारी दिए । बैठकले सबै स्थानमा एक्लै निर्वाचनमा उठ्ने निर्णय गरेको छ ।

संघीय राजधानीसमेत रहेको बागमती प्रदेशमा एक नगर प्रमुखसहित ६ वडाध्यक्षको निर्वाचन हुँदैछ । माओवादीले बागमती प्रदेश अन्तर्गत काठमाडौं महानगरपालिका-१६ बाहेक सबै स्थानको उम्मेदवार टुङ्गो लगाइसकेको छ । कोशी प्रदेशमा एक जिल्ला समन्वय समिति प्रमुख, एक गाउँपालिका अध्यक्ष र ७ वडाध्यक्ष गरी रिक्त ९ पदका लागि निर्वाचन हुँदैछ । मधेस प्रदेशका ४ जिल्लाको ६ स्थानीय तहमा उपनिर्वाचन हुँदैछ ।

गण्डकीको एकमात्र रिक्त पद गोरखा नगरपालिका-५ को वडाध्यक्षमा उम्मेदवार टुङ्गो लागिसकेको छ । लुम्बिनी प्रदेशको रिक्त ६ स्थान सबैमा माओवादीले उम्मेदवार टुङ्गो लगाएको छ । कर्णाली प्रदेशको ८ स्थानीय तहमध्ये डोल्पाको त्रिपुरासुन्दरी नगरपालिका-५ र हुम्लाको सर्केगाँड गाउँपालिकाका उपप्रमुख पदमा उम्मेदवार सिफारिस हुन बाँकी छ । सुदूरपश्चिम प्रदेशको एक जिल्ला समन्वय समिति प्रमुखसहित ५ स्थानीय तहमा उपनिर्वाचन हुँदैछ ।

# तामाङ विज्ञ भेला ६ विषयगत समिति गठन गर्दै सम्पन्न




काठमाडौं । शनिबारबाट शुरु भएको तामाङ विज्ञ भेला ६ विषयगत समिति गठन गर्दै सम्पन्न भएको छ । अन्तर्राष्ट्रिय तामाङ परिषद (आइटिसी) को आयोजनामा काठमाडौंको रामहिटिस्थित सिदार्थ बुटिक होटलमा सोमबारसम्म चलेको भेलाले विषयगत समितिहरु गठन गरेको हो ।

भेलाले ३ वर्षे ग्लोबल एक्सन प्लानसमेत पारित गरेको आइसिटीका महासचिव टासी लामा तामाङले बताए । भेलाले तामाङ भाषाको प्रयोगमा विस्तार, तामाङ मिडिया भाषाशैली निर्माण गर्ने, त्रिभुवन विश्वविद्यालयमा तामाङ विभागको माग गर्नेलगायतको तीन वर्षे एक्सन प्लान तयार भएको भाषाविद् अमृत योञ्जन तामाङले बताए ।

यसैगरी थर, थातथलोको विषयमा गहन अध्ययन, अनुसन्धानसमेत गरिने गरी एक्सन प्लान तयार भएको अध्ययन अनुसन्धान तथा क्षमता अभिवृद्धि समितिकी संयोजक सुदिपा लामाले बताइन् ।

समितिको संयोजक को को?

१. डा. संग्राम सिंह लामा (संयोजक) सांस्कृतिक पुनःउत्थान समिति ।

२. अजितमान तामाङ (संयोजक) भाषा, लिपि तथा शिक्षा प्रबर्द्धन समिति ।

३. खेन्पो सोनाम ग्युर्मे लामा (संयोजक) अन्तर्राष्ट्रिय उच्चस्तरीय तामाङ पञ्चाङ्ग समिति ।

४. सुदिपा लामा (संयोजक) अध्ययन अनुसन्धान तथा क्षमता अभिवृद्धि समिति ।

५. अधिवक्ता सोम बहादुर घले (संयोजक) तामाङ मानवअधिकार तथा कानुनी सेवा प्रवर्द्धन समिति ।

६. दिनेश लो (संयोजक) तामाङ कला, संस्कृति, साहित्य, इतिहास लेखन समिति ।

विषयगत समिति सात सदस्यीय रहने र प्रत्येक समितिमा एक एक जना सचिवसमेत चयन गरिसकेको आयोजकले जनाएको छ । आइसिटीले आयोजना गरेको विषयगत विज्ञ भेलामा शनिबारबाट समूहगत छलफल शुरु भएको थियो । विज्ञ भेलामा सांस्कृतिक पुनः उत्थान समितिको संयोजन घेदुङका पूर्वअध्यक्ष परशुराम तामाङले गरेका थिए । त्यसैगरी तामाङ कला, संस्कृति, साहित्य तथा इतिहास लेखन समितिको संयोजन डा संग्रामसिंह लामा, तामाङ मानवअधिकार प्रवर्द्धन समितिको संयोजन सोमबहादुर घले, भाषा, लिपि तथा शिक्षा प्रवर्द्धन समितिको संयोजन अमृत योञ्जन तामाङ, अध्ययन, अनुसन्धान तथा क्षमता अभिवृद्धि समिति डा मुक्तसिंह थोकर र अन्तर्राष्ट्रिय उच्च स्तरीय तामाङ पञ्चाङ्ग समितिको संयोजन मोहन तामाङले गरेका थिए ।

कार्यक्रमको उद्घाटन बागमती प्रदेशका मुख्यमन्त्री बहादुरसिंह लामा तामाङले गरेका थिए । उद्घाटन सत्रलाई तामाङ घेदुङका कार्यवाहक अध्यक्ष सन्चु ब्लोनले स्वागत गरेकी थिइन् । भेलामा परिषद्का स्थायी सदस्य राष्ट्रहरू नेपाल, अमेरिका, भारत, भुटान, बर्मालगायत ७ राष्ट्रका प्रतिनिधिहरू सहभागी भएका थिए । भेलामा विभिन्न देशमा क्रियाशील दुई दर्जन बढी राष्ट्रिय तथा सम्बन्धन सदस्य संस्थाहरूका प्रतिनिधिले भर्चुअल माध्यमबाट सहभागिता जनाएका थिए ।

# भक्तपुर प्रहरीको सुरक्षा रणनीति सार्वजनिक

भक्तपुर । जिल्ला प्रहरी परिसर भक्तपुरको प्रमुखको रुपमा सरुवा भई आएका एसपी माधवप्रसाद बुढाथोकीले आफू सूचना लुकाउने पक्षमा नरहेको स्पष्ट पारेका छन् । नेपालीहरुको महत्वपूर्ण चाडपर्व सम्पन्न भएसँगै महानगरीय प्रहरी परिसर भक्तपुरले आइतबार पत्रकार सम्मेलन गरी भक्तपुर जिल्लाको शान्ति सुरक्षाका कार्य सम्पादन र चुनौतिहरुबारे पत्रकार सम्मेलन गर्दै प्रहरीको सुरक्षा रणनीति सार्वजनिक गर्ने क्रममा बताएका हुन् ।

एसपी बुढाथोकीले आफू कार्यभार सम्हालन थालेपछि पत्रकारहरुसमक्ष सूचना प्रवाहमा कन्जुस्याई नगरेको बताए । उनले राज्यको चौथौं अंगको रुपमा रहेको पत्रकारलाई वेवास्ता गरेर देश सञ्चालनको चौथौ मुख्य अंगलाई वेवास्ता गर्ने कुरै नआउने बताए ।

त्यस अवसरमा उनले जिल्लाको चाडपर्व लक्षित गरी करोडौ हारजित हुने गरी जुवाटास खेल्ने गरेको खवरहरु समेत आए पनि यस वर्षको चाडपर्व सामान्य रहेको जनाए । लागुऔषध कारोबार देखिएको भन्दा बढी भएको हुनसक्ने अनुमान गर्दै बुढाथोकीले अबैध हातहतियार, पटका नियन्त्रण, बजार अनुगमन, चार्डपर्व लक्षित सुरक्षा कार्यान्वयन गर्दै चार पटकसम्म गरेको अनुगमणले रु. १५ हजार जरिवाना, १० हजार बराबरको सामान नष्ट गरेको जनाए । साथै, दशै तिहार र छठ पर्व अवधिभर भक्तपुर जिल्लामा अन्दाजी ४८ हजार बराबरको पटका बरामद गरे पनि ठाउँठाउँमा पटका पड्केको टिप्पणी उनले गरे । ट्राफिक नियम उलघंन गर्ने २१५७ सवारी साधन कारवाहीबाट १४ लाख पचपन्न हजार पाँच सय रुपैयाँ राजश्व संकलन गरेको र ८७ वटा सवारी दुर्घटनामा ३ जनाको मृत्यु, ५ जना गम्भिर घाइते र ५१ जना सामान्य घाइते भएको जनाए ।

परिसरका सूचना अधिकारी ढुण्डीराज नेउपानेले प्रस्तुत गरेको प्रतिवेदन अनुसार यस वर्षको दशैं, तिहार र छठ पर्वमा लागू औषध अपराधका ५ घटनाबाट १० जना, बाल यौन दुरुपयोगका २, दुघर्टनाबाट २ जना, जुवाका ९ अपराधबाट ३२ जना, हुण्डीबाट १ जना, चोरीका ८ घटनाहरुबाट १५ जना, सवारी अंगभंगका ६ घटनाबाट ५ जना पक्राउ र १ जना फरार तथा ६ जना घाइते भएको उल्लेख गरे । ठगीका १ घटना भएको प्रहरीको जानकारीमा आए पनि एक जना फरार रहेको जानकारी उनले गराए । अपराधिक उपद्रव गर्न नहुने १ घटनामा २ जना र कर्तव्य ज्यानका २ घटनामा २ जना पक्राउ र २ जनाको मृत्य समेत भएको उल्लेख गर्दै सूचना अधिकारी नेउपानेले भवितव्य ज्यानका १८ घटनाबाट १८ जनाको ज्यान गएको बताएको छ ।

फैसला कार्यान्वय सम्बन्धी कार्वाहीमा ४३ जना पक्राउ गरी ८१ हजार ७६० जरिवाना तथा १ वर्ष ६ महिना १६ दिने कैद सजाय भएको भन्दै चाडपर्व लक्षित सुरक्षा योजना कार्यान्वयनका लागि ६१७ जना प्रहरी कर्मचारीहरु परिचालन भएको जनाएको छ ।

महानगरीय प्रहरी परिसर भक्तपुरको भावी रणनीतिक योजनाको रुपमा फैसला कर्यान्वयनमा जोड दिने, सवारी दुर्घटनालाई न्यूनिकरण गर्ने, लागू औषध नियन्त्रण गर्ने, आत्महत्या न्यूनिकरण गर्नको लागि प्रभावकारी रुपमा समुदाय प्रहरी साझेदारी कार्यक्रम सञ्चालन गर्ने र शान्ति सुरक्षा कायम गरी अपराध रोकथाम र नियन्त्रण गर्ने कार्यक्रमहरु पनि अघि सारेको परिसरले जनाएको छ ।

जिल्ला ट्राफिक प्रहरी कार्यालय भक्तपुरका प्रमुख प्रविण खत्रीले जिल्लाका मुख्य सडकहरुको ट्राफिक लाईटहरुको व्यवस्थापनका लागि स्थानीय तहहरुसँग समन्वय भइरहेको बताउँदै सवारी कारवाही भन्दा सवारी दुर्घटना न्यूनिकरणका लागि ट्राफिक प्रहरी लागिपरेको जनाए । चालकहरुको सुविधाका लागि अबदेखि नागरिक एपमार्फत लाइसेन्स हेर्न सकिने व्यवस्था भएको र भविष्यमा बिलबुक पनि एप मार्फत हेर्न सकिने धारणा उनले राखेका थिए ।

# काग बारे वैज्ञानिकको दावी ! जसले १७ वर्षसम्म शत्रुता राख्छ



एजेन्सी । वैज्ञानिकहरूका अनुसार कागमा अद्भुत स्मरणशक्ति हुन्छ, जसका कारण उनीहरूले मानव व्यवहारलाई लामो समयसम्म सम्झन सक्छन् । प्रोफेसर जोन मार्जलफ दावी गर्छन् कि कागले १७ वर्षसम्म मानिससँग अनुभवहरू सम्झन सक्छन् । २००६ मा, प्रोफेसर मार्जलफले एउटा प्रयोग गरे जसमा उनले मास्क लगाएका सात कागहरूलाई खोरमा राखे र तिनीहरूका प्वाँखहरू चिन्ह लगाए । यसपछि उनले कागहरूलाई कुनै हानि नगरी छोडिदिए । यस व्यवहारबाट काग रिसाए र वैज्ञानिकका अनुसार उनले मास्क लगाएको व्यक्तिलाई आक्रमण गर्न थाले । यो पनि देखियो कि मास्क लगाएर आएकालाई आक्रमण गर्ने तीव्र रुपमा बढेको देखियो ।

कागहरूको सामाजिक बुद्धि

कागको यो असाधारण क्षमताको अध्ययनपछि वैज्ञानिकले कागले मानिसको व्यवहार सम्झने मात्रै नभएर अन्य कागलाई पनि बाँड्ने दाबी गरेका छन् । कुकुरहरूले आपसमा कुराकानी गर्न सक्छन् र आफ्नो समूहलाई कुनै खतरा वा आफ्नो अनुभवको बारेमा जानकारी गराउन सक्छन् ।

प्रतिशोधको सामूहिक व्यवहार

कागहरूमा पाइने एउटा विशेष कुरा यो हो कि यदि कागले कुनै व्यक्तिसँग नराम्रो अनुभव गरेको छ भने त्यो जानकारी अरू कागहरूमा पनि फैलाउँछ । कहिलेकाहीँ भालेले त्यो व्यक्तिलाई एक्लै वा कहिलेकाहीँ सम्पूर्ण समूहलाई आक्रमण गर्न सक्छ । यस सामूहिक प्रतिशोधले गहिरो समझ र सहयोगको लागि कागहरूको क्षमता देखाउँछ ।

कागको विषयमा किताब लेख्ने विचार

यस विषयमा उनको गहिरो चासोका कारण प्रोफेसर मार्जलफले कागको बुद्धि, तिनीहरूको बदला र व्यवहारमा आधारित पुस्तक लेख्ने योजना बनाएका छन् । उनी भन्छन्, ‘हाम्रो वरिपरि देखिने यी काला चराहरू बौद्धिक मात्र नभएर सामूहिक स्मरण शक्ति र सञ्चार गर्ने अद्भुत क्षमता पनि भएका छन् ।

मानिस र काग बीचको व्यवहार

कागको यो व्यवहारबाट प्रकृतिमा रहेका हरेक प्राणीको सामाजिक र सञ्चारात्मक व्यवहार हुन्छ भन्ने कुरा बुझ्न सकिने वैज्ञानिकहरुको विश्वास छ । मानवसँग कागको यो सम्बन्धले प्रकृतिका अन्य प्राणीहरूले पनि मानवसँग सम्बन्धित घटनाहरूलाई गहिरो रूपमा बुझेर विशेष प्रतिक्रिया दिने संकेत गर्छ ।

# उ. कोरियाद्वारा रूससगको सुरक्षा सम्झौता अनुमोदन



एजेन्सी । उत्तर कोरियाले रुससँग गरेको ऐतिहासिक सुरक्षा सम्झौता अनुमोदन गरेको छ । यसले सुरक्षा सहयोगलाई अझ प्रगाढ बनाएको छ । यसै सम्झौताका आधारमा प्योङयाङले मस्कोलाई युक्रेनविरुद्ध लड्न मद्दत गर्न हजारौं सैनिक पठाएको हो। यो सम्झौताले शीतयुद्धदेखि सहयोगी रहेका दुई समाजवादी मुलुकबीच महिनौंदेखिको सैन्य सम्बन्धलाई औपचारिकता दिएको छ ।

सियोल र सहयोगी संयुक्त राज्य अमेरिकाले आणविक शक्ति सम्पन्न उत्तर कोरियाले रुसमा हजारौं सैनिक पठाएको आरोप लगाउँदै आएका छन्। उत्तर कोरियाली सैनिकलाई रूसी पोशाकले सुसज्जित गरी कुर्स्क नजिकैको सीमामा जम्मा गरिएको ती मुलुकका सैनिक अधिकारीले बताएका छन् ।

कोरियाली केन्द्रीय समाचार संस्था (केसीएनए) का अनुसार उक्त सम्झौतालाई नेता किम जोङ उनको आदेशको रुपमा अनुमोदन गरिएको छ । राष्ट्रपति भ्लादिमिर पुटिनले हस्ताक्षर गरेको उक्त सम्झौतालाई अनुमोदन गर्न गत साता रुसी सांसदहरूले सर्वसम्मतिले मतदान गरेपछि उत्तर कोरियाका तर्फबाट यो सूचना आएको हो । उत्तर कोरिया युक्रेनमा रूसको आक्रमणको सबैभन्दा मुखर र महत्वपूर्ण समर्थक बनेको छ ।

पश्चिमा राष्ट्रहरूले लामो समयदेखि मस्कोलाई युक्रेनमा प्रयोग गर्नका लागि तोपका गोला र क्षेप्यास्त्रहरू आपूर्ति गरेको आरोप प्योङयाङलाई लगाउँदै आएका थिए तर हालैका हप्ताहरूमा हजारौं उत्तर कोरियाली सैनिकहरू युद्धमा संलग्न हुन तयार भएपछि यो समर्थन बढेको छ ।

दुई देशबीचको सम्झौता गत जुनमा क्रेमलिन प्रमुखको उत्तर कोरिया भ्रमणका क्रममा रणनीतिक साझेदारी सन्धिमा हस्ताक्षर गरेका थिए । यसले दुवै देशलाई एकअर्कामाथि आक्रमण भएमा ‘अविलम्ब’ सैन्य सहायता प्रदान गर्न र पश्चिमी प्रतिबन्धहरूको विरोध गर्न अन्तर्राष्टिय रूपमा सहयोग गर्न बाध्य बनाएको छ ।

# लागू औषध कारोबारको अभियोगमा मेडिकल संचालक

भक्तपुर । लागू औषध विरुद्ध भक्तपुर प्रहरी आक्रामक भएको छ । अघिल्लो आव लागू औषध कारोबारको अभियोगमा भक्तपुरमा एकजनालाई पनि पक्राउ नगरेको प्रहरीले कात्तिक महिनामै ५ घटनामा १० जनालाई पक्राउ गरेको छ । पक्राउ पर्नेमा २ स्थानका औषधी पसल संचालक समेत परेका छन् । लागू औषधको कारोवार गरेको अभियोगमा प्रहरीले शनिवार मध्यपुर थिमि-९ राधेराधे स्थित सुजु मेडिकलका संचालक ४८ वर्षीय गणेश प्रसाद आचार्यलाई पक्राउ गरी अनुसन्धान अघि बढाएको जिल्ला प्रहरी परिसर भक्तपुरका सूचना अधिकारी एवं प्रहरी नायब उपरीक्षक ढुण्डीराज नेउपानेले बताएका छन् ।

सुजु मेडिकलबाट लागू औषध विक्री वितरण भइरहेको छ भन्ने गोप्य सूचनाको आधारमा खटिएको प्रहरी टोलीले क्रेता २८ वर्षीय राजेश गुरागाईसहित संचालक आचार्यलाई शनिवार नियन्त्रणमा लिएको थियो । सो औषधी पसल खानतलास गर्दा ५ सय ३० थान ट्याब्लेट लागू औषध बरामद भएको डिएसपी नेउपानेले जानकारी दिए । भक्तपुर जिल्ला अदालतले आइतवार ५ दिन म्याद थप गरीदिएको र उनीहरु उपर थप अनुसन्धान कार्य भैरहेको उनको भनाइ छ ।

यस अघि कात्तिक पहिलो सातामै मध्यपुर थिमि- १ लौहकिन्थली स्थित एक फार्मेसीका संचालक रोहित सिंहसहित बलिराम खड्का लागू औषध विक्री वितरण गरेको आरोपमा पक्राउ परेका थिए । १ सय ८० ट्याब्लेट लागू औषध सहित पक्राउ परेका उनीहरुमाथि अझै अनुसन्धान भैरहेको प्रहरीको भनाइ छ ।

जिल्ला प्रहरी परिसर भक्तपुरका प्रमुख एवं प्रहरी उपरीक्षक माधव बुढाथोकीले लागू औषध दुर्व्यसन रोक्न यसको कारोबार रोक्नुको बिकल्प नभएको बताए । लागू औषध सेवन गर्ने माथि अनुसन्धान गर्दा कारोबारी सम्म पुगिने उनको अनुभव छ । साना कारोबारीबाटै ठुलो कारोबारी पक्राउ पर्ने भएकोले लागू औषध राख्ने जोकोहीलाई पक्राउ गरी अनुसन्धान अघि बढाउने उनले बताएका छन् ।

# नेताको आर्थिक प्रगति बढेको तर जनतामा भने निराशा : सांसद थापा

भक्तपुर । नेपाली काँग्रेस भक्तपुरका सभापति एवं प्रतिनिधि सभा सदस्य दुर्लभ थापाले नेताहरुको आर्थिक हैसियत बढेको कुरा बताएका छन् । नेताको आर्थिक हैसियत बढ्नु तर, जनताको आर्थिक अवस्था कमजोर हुनु बिडम्बना भएको उनले बताए ।

शनिवार कटुन्जेमा आयोजित लौहपुरुष गणेशमान सिंहको ११० औं जन्मजयन्ती समारोहमा बोल्दै सांसद थापाले सर्वमान्य नेता गणेशमान सिंहले प्रजातन्त्र प्राप्तिपछि राजनीतिक क्रान्ति सकिएको र अब आर्थिक क्रान्ति गर्नुपर्ने उद्घोष गरेका भएपनि त्यो हुननसकेको प्रति दुख व्यक्त गरे ।

नेताको आर्थिक प्रगति बढेको तर जनतामा भने निराशा मात्र बढेको उनले बताए ।"नेताको आर्थिक उन्नति भयो, जनताको भागमा निराशा मात्र रह्यो ।" उनले भने ।

उनले प्रत्येक निराश जनतामा आशाको संचार गर्नुपर्ने दायित्व काँग्रेसले बोक्नुपर्ने पनि बताए । समस्या मात्र खोतल्ने नभई समस्याको समाधान दिनुपर्ने भन्दै सांसद थापाले सर्वसाधारण जनताका समस्या र गुनासा बढाउनेमा नभई समाधानका उपाय खोज्न आफ्ना कार्यकर्तालाई निर्देशन समेत दिए ।

प्रजातन्त्रको पुनर्बहालीका लागि आन्दोलनको कमान्डर रहेका गणेशमानले प्रजातन्त्र प्राप्तिपछि प्राप्त प्रधानमन्त्री बन्ने अफर त्यागेर आफ्ना समकक्षी कृष्ण प्रसाद भट्टराई लाई अघि सारेको स्मरण गर्दै उनले त्यो त्याग र आदर्श हरेक काँग्रेस नेताकार्यकर्तामा हुनुपर्ने आवश्यकता पनि औल्याए ।

कार्यक्रममा उनले आफूलाई बिकास बिरोधी भनेर भ्रम छर्ने विपक्षीहरुले बिकासका नाममा भद्रगोल सिर्जना गरेका र भ्रष्टाचारमा लिप्त भएका आरोप लगाएका थिए ।

कार्यक्रममा नेपाली काँग्रेसका केन्द्रीय सदस्य बलबहादुर केसीले गुट उपगुटमा बाडिन पुगेको काँग्रेसले गणेशमान वाट सिक्नुपर्नेमा जोड दिए । गणेशमानले कोही व्यक्ति विशेषलाई आफ्नो नजिक नबनाएका र सबै काँग्रेसजनलाई उत्तिकै स्नेह गरेका उनले स्मरण गरे ।

सो अवसरमा गणेशमान स्मृति बाटिकाका अध्यक्ष माथवरसिंह बस्नेतले श्रद्धा मन्तब्य राखेका थिए भने कार्यक्रमको संचालन यादव प्रसाद अधिकारीले गरेका थिए । कार्यक्रममा केन्द्रीय सदस्य मदन कृष्ण श्रेष्ठ, प्रदेश, जिल्ला र नगर समितिका पदाधिकारी, चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्री, पूर्व मन्त्री कृष्णलाल भडेल, अग्रज नेता कविर राणा लगायतको उपस्थिति रहेको थियो ।

सहभागीहरुले लौह पुरुष गणेशमान सिंहको शालिकमा माल्यार्पण गर्नुका साथै प्रजातान्त्रिक आन्दोलनमा उनको योगदानको स्मरण गरेका थिए ।

# सेन्ट गोबेन जिप्रोक ट्रफीका लागि ठेकेदार विष्णु र सीताराम छानिए

काठमाडौं । सन् २०२४ नोभेम्बरमा भियतनाममा हुने जिप्रोक ट्रफीका लागि दुई नेपाली ठेकेदार विष्णुबहादुर राउत र सीताराम अधिकारीद्वारा सञ्चालित परियोजनाहरू सेन्ट गोबेन जिप्रोक इन्डियाले छनोट गरेको छ। विजेताहरूले ग्लोबल जिप्रोक ट्रफीमा पनि भाग लिनेछन्।

पोखराका ए-वन इन्टेरियर कम्पनीका सञ्चालक समेत रहेका ठेकेदार विष्णुबहादुर राउतले काठमाडौंको ट्रिनिटी कलेजको ड्राईवाल विभाजनको काम गरेका थिए भने अर्का ठेकेदारले धरहरामा लक्ष्मी इन्टेरियर एण्ड डेकोरमार्फत फल्स सिलिंगको काम गरेका थिए । यस्तो अनुकरणीय काम गरेबापत उनीहरु सेन्ट गोबेन जिप्रोक ट्रफीका लागि छनोट भएका हुन् ।



सेन्ट(गोबेन वातावरणमैत्री र हल्का तौल संरचनात्मक निर्माण सामग्रीको लागि विश्वको सबैभन्दा ठूलो कम्पनी हो। यो फ्रान्सबाट सुरु भएको हो । दीपिशा ग्रुप नेपालको लागि सेन्ट(गोबेन जिप्रोकको च्यानल पार्टनर मध्ये एक हो, जसले खुद्रा बजार र परियोजनामा ठेकेदारहरूलाई सहयोग पुर्याउन मद्दत गर्छ। जसका प्रबन्ध निर्देशक युवा उद्यमी श्री बाल दिवास पण्डित हुन्, दीपिशा ग्रुप दिगो निर्माण र वातावरण मैत्री उत्पादनको दृढ विश्वास र प्रवर्द्धक हो।

दिगो विकासमा योगदान पुऱ्याउने प्रविधिसहितको निर्माण क्षेत्र अहिले हाम्रो देशको पूर्वाधार विकासको कुञ्जी बनेको छ । यदि निर्माण व्यवसायीहरू प्रविधिसँग सुसज्जित छन् भने, उत्पादन उच्च गुणस्तरको र वातावरणमा कुनै नकारात्मक असर नगरी विश्वसनीय हुनेछ। नेपालले अपेक्षाहरू पूरा गर्न द्रुत र राम्रो पूर्वाधार विकास आवश्यक छ।

प्रत्येक राष्ट्र निर्माणमा पूर्वाधार विकास महत्त्वपूर्ण कारक हो, नयाँ निर्माण प्रविधिले पनि महत्वाकांक्षी विकास लक्ष्यहरू प्राप्त गर्न मद्दत गर्दछ। आज नेपालमा ठेकेदारलगायत निर्माण कम्पनीले नयाँ र विश्वस्तरीय निर्माण प्रविधि अपनाउन थालेका छन् । अन्य देशले पनि ध्यान दिएर मान्यता दिएको देखिन्छ । नेपाली कम्पनीले अन्य देशमा पनि काम गर्ने अवसर पाउन थालेका छन् ।

नयाँ प्रविधिहरूको बारेमा कुरा गर्दा, उदाहरणका लागि, ड्राईवाल पाटेसन र ध्वनि इन्सुलेशन लिन सकिन्छ, जुन प्रकाश, छिटो, र दिगो निर्माणको लागि विश्वव्यापी रूपमा चिनिन्छ।

सेन्ट गोबेन जाइप्रोकका प्रबन्ध निर्देशक सुदीप कोल्टेले नेपाली ठेकेदारहरूले विश्वव्यापी निर्माण प्रवृत्ति र प्रविधिहरू अपनाएका छन्। उनले भने, 'दिगो निर्माण अहिलेको आवश्यकता हो, हाम्रो मातृभूमिलाई आगामी पुस्ताका लागि राम्रो घर बनाउन उज्यालो, दिगो र हरित निर्माण प्रविधि अपनाउनुपर्छ । यो नेपालका लागि स्वागतयोग्य परिवर्तन हो । किनभने ड्राईवाल निर्माण भूकम्पीय जोखिम, निर्माणका लागि कठिन, पहाडी भूभागका लागि वरदान हुन सक्छ।

ईंट वा ब्लक पर्खाल निर्माण विधिहरूसँग परम्परागत निर्माणको तुलनामा, ड्राईवाल छिटो, हल्का र अधिक दिगो निर्माण समाधान हो। फलस्वरूप, ड्राईवालले आजकल मानिसहरूको ध्यान आकर्षित गरिरहेको छ।

ड्राईवालको वजन इट्टाको पर्खालको ज्ञरज्ञण् हो र निर्माणको लागि व्यावहारिक रूपमा कुनै पानी आवश्यक पर्दैन। यसले पनि यसको महत्व बढाएको छ ।

यो परम्परागत उत्पादन विधिहरू भन्दा ठ देखि ज्ञण् गुणा छिटो छ। यस कारणले गर्दा, जापान लगायत देशहरूले प्रचुर मात्रामा ड्राईवाल प्रयोग गर्छन्। हामीजस्ता भूपरिवेष्ठित देश जहाँ भूकम्प जान्छ त्यहाँ यो राम्रो विकल्प भएको छ। यो सामग्री धेरै हल्का र ह्यान्डल गर्न सजिलो भएकोले, यो पुग्न गाह्रो क्षेत्रमा छिटो निर्माण गर्न धेरै सजिलो छ।

सेन्ट गोबेन जिप्रोकका डा धार्मिक वैष्णवले पनि जिप्रोक ट्रफीमा नेपालको सहभागिता र प्रतिनिधित्व देखेर आफू निकै उत्साहित भएको बताए । उनले भने, 'तीव्र विकासशील मुलुक भएकाले नेपालले धेरै आत्मविश्वास दिएको छ ।

# ट्रम्पका बारे बाबा भेंगाको खतरनाक भविष्यवाणी



एजेन्सी । अमेरिकी राष्ट्रपति चुनावमा डोनाल्ड ट्रम्पले ठूलो जित दर्ता गरेर इतिहास रचेका छन् । उनको जितले रिपब्लिकन क्याम्प र ट्रम्प समर्थकहरुमा खुसीको लहर छ । तर, बाबा वाङ्गाले डोनाल्ड ट्रम्पको बारेमा यस्तो खतरनाक भविष्यवाणी गरेका छन्, जुन सत्य साबित भए पूरै अमेरिकामा अराजकता मच्चाउन सक्छ ।

बाबा वांगा बुल्गेरियाका एक झाडफुक गर्ने व्यक्ति थिए, जसलाई उनको सही भविष्यवाणीका कारण 'बाल्कान्सको नोस्ट्राडेमस' पनि भनिन्छ । उनले दोस्रो विश्वयुद्ध, चेर्नोबिल आणविक दुर्घटना र सोभियत संघको पतनको भविष्यवाणी गरेका थिए, जुन पूर्णतया सत्य साबित भयो । त्यस्तै बाबा वांगाले पनि डोनाल्ड ट्रम्पको बारेमा चिन्ताजनक भविष्यवाणी गरेका थिए ।

बाबा वाङ्गाले डोनाल्ड ट्रम्पलाई एउटा रहस्यमय रोग लाग्ने भविष्यवाणी गरेका थिए जसले गर्दा उनी बहिरा हुने र ब्रेन ट्युमरबाट ग्रसित हुने थिए । तर, हाल ट्रम्पलाई आफ्नो ज्यान जोखिममा पर्ने कुनै पनि रोग लागेको छैन । तर, भर्खरै ट्रम्पको हत्या गर्ने प्रयास भयो, जसले सिंगो अमेरिकामा आतंक मच्चाएको थियो ।

जुलाई १५, २०२४ मा, जब डोनाल्ड ट्रम्प बटलर, पेन्सिलभेनियामा प्रचार गर्दै थिए, एक २० वर्षीय व्यक्तिले उनीमाथि गोली हाने । ट्रम्पको भाषणको क्रममा अचानक ठूलो आवाज गुन्जियो । ट्रम्पले कान छोएपछि हातमा रगत थियो । केही क्षणमै, गुप्तचर सेवाका एजेन्टहरूले तुरुन्तै उनको वरिपरि घेरा बनाए र ट्रम्पलाई भुइँमा सुताएर सुरक्षा कभर दिए । यसपछि ट्रम्प एक प्रकारले उठे र मुट्ठी उठाए र 'लड, लड, लड' भन्दै नारा लगाए, त्यसपछि गोप्य एजेन्टहरूले सुरक्षा घेरा बनाएर उनलाई स्टेजबाट तल ल्याए । अमेरिकाको यस राष्ट्रपतीय निर्वाचनमा उनको जस्तो तस्विर निकै चर्चित भएको थियो, जुन विश्वभरका पत्रपत्रिकाको पहिलो पृष्ठमा छापिएको थियो । डोनाल्ड ट्रम्पको यो तस्बिरलाई पनि राष्ट्रपति चुनावमा उनको जितमा ठूलो योगदान मानिएको छ ।

सन् १९११ मा जन्मिएका बाबा वाङ्गाले १२ वर्षको उमेरमा आँधीमा परेर आँखाको ज्योति गुमाएकी थिइन् । उनले आफ्नो जीवनको अधिकांश समय बेलासिका पहाडको बुल्गेरियन रुपाइट क्षेत्रमा बिताए । त्यसो त, बाबा वाङ्गका सबै भविष्यवाणीहरू सधैं सही हुँदैनन् । उनले सन् २०१६ सम्ममा सम्पूर्ण युरोप ध्वस्त हुने र सन् २०१० देखि २०१४ सम्म विश्वले आणविक युद्ध देख्ने भविष्यवाणी गरेका थिए । अब तपाई सबैलाई थाहा छ कि यी भविष्यवाणीहरू सत्य साबित भएनन् । यस्तो अवस्थामा ट्रम्प समर्थकहरूले पनि आफ्नो नेताका सम्बन्धमा बाबा वेन्गाको भविष्यवाणी फेरि एकपटक गलत साबित हुनेमा खुसी मनाउँदैछन् ।

# जहाँ महिलाहरु डिभोर्स पछि खुसियाली मनाउँछन् !

एजेन्सी । सम्वन्ध बिच्छेदलाई राम्रो त मानिँदैन, तरपनि कैयन् मानिसहरु यस्ता हुन्छन् जो सँग सम्वन्ध बिच्छेद गर्नुको विकल्प हुँदैन । वैवाहिक सम्बन्ध टुट्नुको पीडामा पनि केही मानिस सामान्य रुपमा जीवन जिउने कोशिस गर्दछन् । अझ परम्परागत समाजमा महिलाका लागि सम्वन्ध बिच्छेद झनै पीडादायक हुन्छ, जसलाई महिलाको असफलतासँग पनि जोडिन्छ ।

सम्वन्ध बिच्छेद पछिको पीडा आफ्नो ठाउँमा छ, तर विश्वमा एउटा यस्तो ठाउँ पनि छ जहाँ महिलाहरुले डिभोर्स भएको खुसियाली मनाउँछन् । त्यहाँ जब कुनै महिलाको डिभोर्स हुन्छ मानिसहरु उत्सव मनाउन थाल्दछन् । जहाँ डिभोर्सलाई गलत मानिँदैन । खासगरी त्यहाँका महिलाहरुका लागि डिभोर्स कत्ति पनि खराब हुँदैन ।

त्यो हो मौरिसानिया । यो उत्तर पश्चिम अफ्रिकामा रहेको एक देश हो जसको ९० प्रतिशत भाग मरुभूमिले ढाकेको छ, जुन विश्वकै सबैभन्दा ठूलो मरुभूमि सहाराको एक हिस्सा हो ।

मौरिसानियाको जनसंख्या ४५ लाख छ । उक्त देशले सन् १९६० मा फ्रान्सबाट स्वतन्त्रता प्राप्त गरेको थियो । मौरिसानिया एउटा यस्तो देश हो जहाँको संस्कृतिमा डिभोर्सको एउटा अहम स्थान रहेको छ । त्यस देशमा डिभोर्सलाई गलत मानिँदैन र निकै सम्मान दिइन्छ । महिलाहरुले यसलाई खुसीखुसी स्वीकार्छन् । डिभोर्सपछि महिलाको परिवारजनले खुसीपूर्वक समाजलाई यो बताइन्छ कि ती चेली डिभोर्सी हुन् । त्यसपछि ती महिला डिभोर्स बजार जान्छिन् ।

वास्तवमा त्यहाँ डिभोर्सी महिलालाई निकै मन पराइन्छ । डिभोर्सपछि महिलाहरु धेरै समझदार र परिपक्व हुन्छन् भन्ने मान्यता मौरिसानियामा छ । पुरुषहरुलाई लाग्छ कि त्यस्ता महिलाहरुले उनीहरुका समस्या बुझ्न सक्छन् । त्यस्तै अविवाहित महिलालाई अहंकारी मानिन्छ । त्यसैले पुरुषहरु अविवाहित महिलालाई धेरै महत्व दिँदैनन् । साथै यस्ता अविवाहित महिला तथा उनका परिवारलाई विवाहका लागि धेरै दाइजो दिनु पर्दछ ।

के हो डिभोर्सी महिलाको बजार ?

मौरिसानियामा डिभोर्सी महिलाको एक बजार छ । डिभोर्स पश्चात् पूर्वपतिको घरबाट प्राप्त सामान तथा फर्निचर बेच्नका लागि डिभोर्सी महिलाहरु उक्त बजारमा जान्छन् । उक्त बजारमा डिभोर्सपछि महिलाहरुले पसल खोल्दछन् र तिनै पसलमा काम गर्न सुरु गर्दछन् । साथै आफ्ना बालबच्चाको लालन पालन गर्नका लागि अन्य व्यवसाय पनि गर्दछन् ।

डिभोर्सपछि महिलाहरुले नयाँ जिवन सुरुवात गर्दछन् र पुनः बिहे पनि गरेर नयाँ परिवार बसाउँछन् । उक्त डिभोर्स बजारमा केवल डिभोर्सी महिलाहरु मात्रै हुने भएकाले जोकोही पुरुष त्यहाँ आएर आफूलाई मनपर्ने जिवनसाथीको खोजी गर्न सक्दछ । यदि कुनै पुरुषलाई कुनै महिलाले त्यहाँ मन पराएमा त्यो ठूलो उपलब्धी हुनजान्छ । त्यहीँ बजारमा महिला र पुरुषबीच कुराकानी भएर त्यसले वैवाहिक सम्बन्धको रुप लिन सक्दछ ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### बेथिति र विकृति बिरुद्ध लाग्ने जो कोहीलाई पनि कानुनी दायरामा ल्याउ

नेपालमा राज्यसत्ता र पदको दुरुपयोग गर्दै अपराधिक गतिविधि गर्ने कार्यले प्रश्रय पाउँदै गएको विगत देखिको घटनाक्रमले पुष्टी गर्दै गएको छ , जब जब पदको दुरुपयोग हुने घटना सतहमा देखिने गर्दछ। तब राजनीतिक दल ती कार्यकर्तालाई निलम्बन र कारबाही गरेको घोषणा गर्दै पन्छिने गरेको र अझ सके अनुसन्धानमा नै प्रभावित पार्ने कार्य गर्ने गरेको छ। यसबाट पनि राजनीतिक दलका नेता तथा कार्यकर्ताहरु पदिय मर्यादमा नाघेर अपराधिक कार्यमा लाग्ने संस्कृतिले प्रश्रय पाइरहेको राजनीतिक बिश्लेषकहरुको ठम्याई छ।

यसै सन्दर्भमा हालै मात्र कोशी प्रदेशका तत्कालीन आन्तरिक मामिला तथा कानुनमन्त्रीसमेत रहेका लीलाबल्लभ अधिकारीलाई जापान भ्रमणको रहर निकै महँगो साबित भयो। उनलाई जापानमा विमानस्थलबाटै केही संदिग्ध व्यक्तिहरूसहितको टोलीलाई फर्काइयो। यस घटनाले नेपालको अन्तराष्ट्रिय क्षेत्रमै ठूलो बदनामी भएको छ। तर अन्तराष्ट्रिय स्तरमा नेपालको बइज्जती भएको बारे न राज्यसत्तामा रहेकोलाई चिन्ता छ नत कुटनीतिक रुपमा राज्यले जिम्मेवारी लिएको देखियो । तर मन्त्रीले भने घटना सार्वजनिक हुनेबित्तिकै मन्त्री पदबाट राजीनामा दिनुपऱ्यो ।

उनीसँगै कागज मिलाएर जापान जानेहरूलाई प्रहरीले नेपाल फर्केनेबित्तिकै पक्राउ गरी कारबाही सुरु गरेको छ। तर मन्त्री भएकै आधारमा अधिकारीलाई भने साधारण सोधपुछ गरी छाडिएको थियो।

तर जब सामाजिक सञ्जाल र पार्टी भित्रैबाट पनि पार्टीकै बदनामी हुने दखिएपछिको आलोचनाबाट बच्न पार्टीले पनि कारबाही गर्दै प्रहरी प्रशासनलाई पक्राउ गर्न बाटो खोले लगतै उनलाई पक्राउ गरेको छ।

मानव तस्करीको आरोप लागिसकेको व्यक्तिलाई जो सुकै भए पनि सामान्य नागरिक सरह पक्राउ गरी कानुनबमोजिम कारबाही चलाउनुपर्छ । नेपालको संविधान र कानुनले कसैलाई काखा र कसैलाई पाखा गरेको छैन। यसैले सरकारले पनि असमान व्यवहार गर्न मिल्दैन।

सार्वजनिक पदमा बस्नेहरूले गरेको अपराधमा झन् गहिरो अनुसन्धान र विशेष कारबाही हुनुपर्छ। अनिमात्र देशमा विधिको शासन रहेको दाबी गर्न मिल्छ । यस प्रकरणमा आफ्नै दलका नेतालाई समेत कारबाही गराएर एमालेका अध्यक्ष तथा प्रधानमन्त्री खड्गप्रसाद ओलीले विधिको शासनप्रतिको प्रतिबद्धता प्रदर्शन गर्ने अवसर पनि पाएका छन् ।

त्यसो त अधिकारीलाई मन्त्री पदबाट राजीनामा गराउनु पनि कारबाहीकै एउटा चरण हो । अधिकारीलाई आरोप लागेपछि बचाउनका लागि एमालेका कुनै नेता अगाडि सरेको नदेखिनु अर्को सकारात्मक पक्ष हो । अब उनलाई कोशी प्रदेश सभाको जिम्मेवारीबाट पनि निलम्वन गरिनु उचित हुनेछ।

देशमा मौलाउँदै गएको सत्ता र शक्तिको आडमा हुने गरेको अपराधिक गतिविधि बेथितिको विरुद्धमा हरेक पार्टीले संरक्षण गर्नुको साटो दण्डको लागि मार्ग प्रशस्त गर्नु उपयुक्त हुनेछ । देशमा विगतमा भएका नक्कली भुटानी प्रकरण, सरकारी जग्गा हिनामिना, ठूलो मात्रामा सुनको तस्करी, स्वास्थ्य क्षेत्रमा भएको ओम्नी प्रकरणलगायत केही समय अगाडि राज्यलाई नै ठगी गरेर देशको ठूलो राजश्व छलीको प्रकरणमा न्यायपालिकाले दोषी ठहर गर्दै सजाय पाएका व्यवसायी मिन बहादुर गुरुङबाट नेकपा एमाले पार्टीले पार्टीकै अध्यक्ष तथा सरकार प्रमुखसमेत रहेका प्रधानमन्त्री ओली समक्ष अर्बौ पर्ने सम्पत्ति दान गरेको प्रकरणबाट पार्टी माथि आम जनसमुदाय र पार्टीकै केही नेताहरुबाट विरोध भएको छ । तर पार्टीको नेतुत्वकर्ता भने सो कायृलाई जायज बनाउने खेलमा अझै लागेको देखिन्छ। यसरी पद र प्रतिस्थाको आडमा हुने यस प्रकारका बेथितिको अन्त्य नभएसम्म देशमा सुशासन कायम हुने कुरा सोच्न सकिन्न । तसर्थ आगामी दिनमा देशमा रहेका प्रमुख राजर्नीतिक दल र हाल जनजीविकालाई सहज बनाउने प्रतिबद्धता गर्दै उदाएको नयाँ पार्टीहरुले पनि बेथिति र विकृति बिरुद्ध लाग्ने जो कोहीलाई पनि कानुनी दायरामा ल्याउन र कारवाही गराउने नीति अख्तियार गरमा पद र प्रतिष्ठाको आडमा हुने गरेका अपराधिक गतिविधि कम हुन गई देशमा सुशासन कायम हुने थियो।

# पत्रकार सुरक्षाको सवालमा महासङ्घ नेतृत्वको घातक मौनता

● शालिग्राम पाण्डे

नेपालको संविधानको प्रस्तावनामा पूर्ण प्रेस-स्वतन्त्रता पदावली उल्लेख गरिए पनि व्यवहारमा अभिव्यक्ति स्वतन्त्रताका संवाहक पत्रकारहरू सुरक्षित छैनन् । रक्षक नै भक्षक भनेजस्तो राज्यको सुरक्षा निकायबाटै जानाजान र हाकाहाकी पत्रकार हरूमाथि भौतिक आक्रमणका घटनाहरू हुने गरेका छन् ।

पत्रकारहरूलाई सुरक्षाको प्रत्याभूति दिने काम सरकार तथा सुरक्षानिकायको हो । लोकतान्त्रिक शासन व्यवस्थामा हतियार प्रयोग गरी तानाशाहीतन्त्र चलाउने छुट कसैलाई छैन । पत्रकारविरुद्ध सुरक्षानिकायबाट एकपछि अर्को भौतिक आक्रमणको घटना हुनुले पत्रकारजगत मर्माहत भएको छ । देशैभरी पत्रकारहरू भौतिक आक्रमणको त्रासदीपूर्ण अवस्था ब्यहोर्न बाध्य बनाइएका छन् । सार्वजनिक ठाउँमा डराएर समाचार सङ्कलन कार्य गर्नुपर्ने परि स्थिति सिर्जना भएको छ । संविधानप्रदत्त सार्वजनिक अभिव्यक्ति स्वतन्त्रताको सवाल प्रश्नको घेरामा परेको छ ।

उल्लिखित चिन्ताजनक पृष्ठभूमिको पछिल्लो उदाहरण हालै पोखरामा देखापरेको छ । पूर्वगृहमन्त्री रवि लामिछाने पक्राउविरुद्ध भएको प्रदर्शनको समाचार सङ्कलन गरिरहेको अवस्थामा सुरक्षाकर्मीहरूले पब्लिक टेलिभिजनका क्यामेरापर्सन र कान्तिपुर टेलिभिजनका संवाददातालाई मर्माहत हुनेगरी कुटपिट गरेका छन् । गत मङ्गलबार भएको सो घटनामा पब्लिक टेलिभिजनको गण्डकी छड्के कार्यक्रमका राजकुमार माझी, खेलकुद पत्रकार विनोद लामी छाने र कान्तिपुर टेलिभिजनका इन्द्रप्रसाद पौडेललाई प्रहरी समूहले घेरा हाली लट्ठी र लात्तले कुटपिट गरेको हो । सो अनपेक्षित घटनामापरी माझी र पौडेलको शरीरमा चोट लाग्नुका साथै क्यामेरामासमेत क्षति पुगेको छ ।

पत्रकार भन्ने चिन्दाचिन्दै प्रहरी समूहद्वारा भएको यस ज्यादतीलाई आम पत्रकार जगत र जनवृत्तले सामान्य रूपमा लिन मिल्दैन । गण्डकी छड्के कार्यक्रमसम्बद्ध पत्रकारहरूलाई यसअघि पनि प्रहरीले दुर्व्यवहार गरेको घटना सार्वजनिक भएको थियो । पत्रकार भन्ने पहिचान खुल्दाखुल्दै कार्यस्थलमा पत्रकारउपर निर्घात कुटपिट भएको यो घटना पूर्णतः नियोजित देखिएको छ । यस घटनाको हामी घोर भत्सर्ना गर्छौं । साथै दोषी पहिचान गरी विभागीय कारबाही गरिएको विवरण तत्काल सार्वजनिक गर्न गृह मन्त्रालय तथा प्रहरी प्रतिष्ठानसँग जोडदार माग गर्छौं ।

यता, पत्रकारको भौतिक सुरक्षासँग सम्बन्धित यस्तो गम्भीर विषयमा पत्रकार महासङ्घ केन्द्रीय नेतृत्वको ठोस प्रतिक्रिया सार्वजनिक भएको पाइएको छैन । उनीहरूको मौनताले आम पत्रकारवृत्तमा सुरक्षाप्रति चिन्ता थपेको छ । पत्रकारको पेसागत सुरक्षाका लागि गठित निकायको मौनताले पत्रकारितामा सेल्फ-सेन्सरसिप (स्वनियन्त्रण)को मात्रा पनि बढाएको छ ।

नियतवश पत्रकारउपर सामूहिक आक्रमण गर्ने प्रहरीहरूलाई घटना भएको एक साता बितिसक्दा पनि कारबाही भएको सूचना बाहिरिएको छैन । नेपाल पत्रकार महासङ्घ कास्की र सम्बद्ध सञ्चारसंस्थाले सुरक्षा निकायविरुद्ध विज्ञप्तिबाजी र प्रमुख जिल्ला अधिकारीलाई ध्यानाकर्षण-पत्र बुझाउनेबाहेक अरू केही गरेको पाइएको छैन । जबकि पत्रकार महासङ्घको केन्द्रीय नेतृत्वले दोषीलाई कारबाहीका लागि सडकमा उत्रेर दबाब दिने आमपत्रकारहरुको अपेक्षा थियो ।

पूर्ण प्रेस-स्वतन्त्रता संविधानमा लेखेर मात्र हुँदैन, व्यवहारमा लागू हुनुपर्छ । तानाशाह, निरंकुशता हेरेर, सहेर बस्नु कायरहरुको काम हो, साहसिक पेसा पत्रकारिता गर्नेहरुका हकमा त्यो सुहाउँदैन । पत्रकारउपर कुटपिट गर्ने, मार्ने धम्की दिने, अभद्र व्यवहार गर्ने, प्रहरीले घेरा हालेर लाठी-बुट प्रहार गर्ने कार्यलाई माफी दिन मिल्दैन । पत्रकारउपर कुटपिट गर्ने सुरक्षाकर्मी, नेता, कर्मचारी जोसुकै भए पनि कारबाहीको दायरामा ल्याउनु पर्छ ।

नेपालमा सुरक्षानिकायबाट पत्रकारहरु असुरक्षित भएको फेहरिस्त लामो छ । पत्रकार महासङ्घका तत्कालीन अध्यक्ष विष्णु निष्ठुरीलाई सुरक्षाकर्मीले ज्यान लिने सम्भावना देखिएपछि भूमिगत हुनुपरेको थियो । पत्रकार कृष्ण सेन इच्छुकलाई सुरक्षाकर्मीले कठोर यातना दिएर मारेका थिए । यी र यस्ता गम्भीर घटनाहरु अहिलेको सत्ताराजनीतिमुखी पत्रकार महासङ्घका पदाधिकारीले बिर्सनु स्वाभाविक होला तर सच्चा कलमजीवीहरुले बिर्सेका छैनन्, बिर्सिने छैनन् ।

पत्रकारउपर गरिएको कुटपिट र प्रहरी ज्यादतीविरुद्ध सुनसरीका पत्रकारहरु पटक-पटक चरणबद्ध रुपमा आन्दोलित भएको इतिहास छ । पत्रकारहरु दोषीलाई कारबाहीको मागसहित सडकमा उत्रिँदा पत्रकारउपर धावा बोल्ने सुरक्षाकर्मीलाई केही न केही नसिहत दिएको उदाहरण पनि छ । वर्तमान अवस्थामा भने पत्रकार नेतृत्वले पत्रकार सुरक्षाको सवाललाई प्राथमिकता नदिएको अनुभूति भएको छ ।

नयाँ संविधान बन्नुअघि पत्रकारहरू एक थिए । पत्रकार नेतृत्वले श्रमजीवी पत्रकारको समस्या बुझ्ने गरेका थिए । पत्रकारको सुरक्षा हुनुपर्छ भनेर सबैले एकै स्वरमा बोल्ने गरेका थिए । २०७२ सालको संविधानमा पूर्ण प्रेस-स्वतन्त्रता लेखिएपछि भने त्यसैलाई महान् उपलब्धि करार गर्दै पत्रकारहरू पत्रकारिता कम राजनीति र सत्ताको दलाली बढी गर्न लागेको देखिन्छ । दलका नेतानिकट, राजनीतिक पार्टीको कारिन्दा, विज्ञापनमा दलाली गर्ने, समाचार लुकाएर रकम असुली गर्ने, पार्टी झोला भिरेर महासङ्घको विभिन्न पदमा पुग्ने, पत्रकार परिचयपत्र देखाएर राज्यबाट विभिन्न सुविधा तथा लाभको पद प्राप्त गर्नेको बिगबिगी भएकोपाइन्छ । त्यस्ताहरुको बीचमा देश र जनताको हितमा समाचार लेख्ने, भ्रष्टाचार र अनियमितताविरुद्ध समाचार लेख्ने पत्रकारको आवाज कमजोर हुनुका साथै आम पत्रकारहरुको भौतिक सुरक्षामा चिन्ता थपिएको छ ।

देशमा अपवादबाहेक पत्रकारिता कर्म सकिएबराबर छ । पत्रकारिताको नाममा पर्चाकारिता फस्टाएको पाइन्छ । कलमको माध्यमबाट आवाजविहीनहरूको आवाज बन्नुपर्ने पत्रकारवृत्तमा विद्यमान विभाजन पनि आम पत्रकारहरु हेपिने र पटक-पटक भौतिक आक्रमणमा पर्नुपर्ने एक कारक बनेको पाइन्छ । पत्रकार हुँदैमा गलत काम गर्ने छुट कसैलाई छैन, कानुनअनुसार दण्डित हुनुपर्छ । यो गम्भीर विषयतर्फ समय छँदै सबैको ध्यानाकर्षण हुनु जरुरी छ । अन्यथा नेपाली लोकतन्त्र, अभिव्यक्ति स्वतन्त्रता र पूर्णप्रेस-स्वतन्त्रता आदि भनिएका उपलब्धि र अपेक्षाले गम्भीर क्षति ब्यहोर्नुपर्ने निश्चित छ ।

## शुभश्री साकोसको १८ स्थापना दिवस सम्पन्न

मध्यपुर थिमि । मध्यपुर थिमिको मुटु शंखधरचोकमा कार्यालय स्थापना परी आफ्ना सदस्य विच बित्तीय कारोवार संचालन गर्दै आएको शुभश्री वचत तथा ऋण सहकारी संस्था लि.ले संस्थाको १८ औं स्थापना दिवस संस्थाकै भवनमा एक कार्यक्रमको आयोजना गर्दै मनाएको संस्थाका अध्यक्ष ज्ञानकृष्ण श्रेष्ठले जानकारी दिएका छन् ।

कार्यक्रम केक काटेर संस्थामा आवद्ध सदस्यहरु विच अन्तरक्रिया गर्दै समापन भएको अध्यक्ष श्रेष्ठ बताए ।

# खानी तथा खनिज उत्खनन् गर्ने क्रम तीव्र, परम्परागत भूमि माथि बढ्दो दवाव

कुमार यात्रु तामाङ

जलवायु परिवर्तन न्युनिकरण तथा अनुकूलनका लागि ऊर्जा उत्पादनमा बृद्धि गर्ने सरकारी नीतिसंगै नेपाल लगायत विश्वभरी नै खानी तथा खनिज उत्खनन् गर्ने कार्यले तीव्रता पाएको छ। यसबाट आदिवासी जनजातिहरुको आफ्नो परम्परागत भूमि र भुक्षेत्र भित्रका प्राकृतिक स्रोतको गैरकानुनी रुपमा अतिक्रमित बनेको छ।

अध्ययनहरुमा उल्लेख भएअनुसार विश्वभरी नै नवीकरणीय उर्जाको बढ्दो प्रयोगसँगै, सन् २०१० यता खनिज पदार्थको माग र आपुर्ती लगभग ५० प्रतिशतको दरले वृद्धि भएको छ।

नेपाली सन्दर्भमा पनि खानी तथा खनिजको अन्वेषण र उत्खनन् कार्य पछिल्लो समयमा बढेको छ। नेपालको सरकारी निकाय खानी तथा भूगर्भ विभागका अनुसार नेपालमा धातु समूहका २१, अधातु समूहका २३, रत्न पत्थर समूहका ६, निर्माण समाग्री समूहका १० इन्धन खनिज समूहका ४ बस्तु गरी ६४ खनिज वस्तु प्राप्त हुने पहिचान भएको छ।

तामा, सुन, फलाम, सिसा, जस्ता, चाँदी, युरेनियम लगायत धातु समूहका २१ समुहका धातुजन्य खानीको नेपालमा संभावना छ भने अधातु समूहका औद्योगिक खनिजहरुमा व्याराइट, क्याल्साइट, माटो, सामन्य नुन, डोलोमाइट, म्याग्नेसाइड पाइन्छ।

अधातु रत्नहरुमा अक्वामरिन, रुवी, निलमणि नेपालमा नै पाइन्छ। हिमाली क्षेत्रमा ग्राभेल र वालुवा, ग्रेनाइट, मार्वल, क्वार्जजाइट, स्लेट, सिनाइट, पाइने गरी खानीहरुको पहिचान भएको छ।

पछिल्लो समयमा नेपालमा सिमेन्ट उत्पादनले तिब्रता पाएको छ। नेपाल पछिल्लो समयमा सिमेन्टमा आत्मनिर्भर भएको छ। नेपालका कुल ६१ उद्योगले वार्षिक २० करोड बोरा सिमेन्ट उत्पादन गरिरहेको छ।

सीमेन्ट कारखानाबाट अतिप्रभावित

नेपाल सरकारको स्वामित्वमा रहेको उदयपुर सिमेन्ट, मकवानपुरको हेटौडा सिमेन्ट, निजी क्षेत्रका सिमेन्टहरुमा शिवम् मारुति, कसमस, युनाइटेड, होङसी, सर्वोत्तम, घोराही, सोनापुर आदि सिमृन्ट कारखानाहरु रोटरी क्लिन प्लान सहित सन्चालनमा छन्।

सिमेन्ट उद्योगका लागि चुनढुंगा र क्लिङकर जस्ता कच्चा पदार्थ आवश्यक पर्छ। यस्तो कच्चापदार्थ भूमि उत्खनन् गरेर मात्र सम्भव हुन्छ।

आदिवासीहरुको भूमि र भूक्षेत्रमा यस प्रकारको खनिज पर्दाथहरुको ठुलो भण्डार रहेका छन्। तसर्थ यी खनिज पदार्थहरुको उत्खनन र निकासीको लागि सरकारी तहबाट योजना बनाउने कार्य भइरहेको छ। कतिपय ठाउँमा परियोजनाहरु समेत संचालन भैसकेका छन्। तर ती उद्योग तथा खानीबाट आदिवासीहरु प्रभावित बनेका छन्।

आदिवासी अभियन्ता दुर्गामणी याक्खा राईका अनुसार नेपालका सिमेन्ट उद्योग र सिमेन्ट उद्योगलाई आवश्यक पर्ने कच्चा पदार्थ चुनढुंगाको उत्खनन र क्लिङ्कर उत्पादन गर्दा आदिवासी जनजातिसंग कुनै प्रकारको परामर्स लिइएको छैन। यसरी स्वतन्त्र, पूर्व, सुसूचित सहमति (एफपीक) नगरी खानी सन्चालन गरिदा आदिवासी तथा स्थानीयहरु प्रभावित भई विस्थापनको शिकार हुनु परेको छ।

राष्ट्रिय आदिवासी जनजाति महिला महासंघकी महासचिव शोभा सुनुवार पनि खानी र खनिजबाट पीडित आदिवासीको पीडा राज्यले सुनुवाई गर्ने पर्ने तर्क गर्नु हुन्छ। 'स्वतन्त्र, पूर्व, सुसूचित सहमति (एफपीक)को अधिकार आदिवासीको अधिकार हो। हाम्रो भूमि, भूक्षेत्र र प्राकृतिक स्रोतसाधनमाथी हाम्रो आत्मनिर्णयको अधिकार हुन्छ।' उहाँले भन्नु भयो-' राज्यले खानी सञ्चालकहरुबाट आदिवासीको अधिकार विशेषगरी स्वतन्त्र, पूर्व जानकारीसहितको मञ्जुरीको अधिकारको उचित सम्मान र सुनिश्चित गराउँन सक्नुपर्दछ।'

स्वतन्त्र, पूर्व, सुसूचित सहमति (एफपीक)को अधिकारले जर्बजस्ती बिना, वार्ता र छलफलमा भागलिन पाउने, आफ्नो भूमि, भुक्षेत्र, प्राकृतिक स्रोतसाधन र आफ्नो समुदायको सरोकारको विषयमा कुनै पनि निर्णय लिनुअघि निर्णय प्रक्रियामा अर्थपुर्ण सहभागि भई छलफलमा भागलिन पाउने, आफ्नो समुदायलाई सरोकार राख्ने विषयमा आफ्नो समुदायले बोल्ने र बुझ्ने भाषामा सूचना र जानकारी प्राप्त गर्ने साथै आफ्नो समुदायलाई सकरात्मक फायदा पुग्ने परियोजनालाई मञ्जुरि दिने र असर पुराउने परियोजनालाई कार्यान्वयन गर्ने कुनैपनि चरणमा आफ्नो मञ्जुरी फिर्ता लिने अधिकारको प्रत्याभूत गरिएको ह्न्छ।

सरकारी नीति डरलाग्दो

नेपालमा प्राकृतिक स्रोतको दोहन गर्ने गरी डर लाग्दो नीति अघि सारेको आदिवासी अधिकारकर्मी डा. श्रीकुमार महर्जनको दावी छ। खानी तथा खनिज मात्र होइन सबै प्रकारका प्राकृतिक स्रोतको प्रयोग गरिँदा आदिवासी जनजातीको अधिकार हनन् हुन सक्ने भएकैले अन्तराष्ट्रिय कानुनहरुमा एफपीकको व्यवस्था गरिएको बताउनु हुन्छ।

नेपालमा विद्युत उत्पादन गर्दा, विद्युतीय प्रसारण लाइन विस्तार गरिदा सम्बन्धीत आदिवासीहरुसंग परामर्स वा सहमति गरिने गरिएको छैन। यो क्रम खानी तथा खनिजको उत्खनन्मा पनि देखिएको डा. महर्जनले बताउनु भयो।

सरकारले जलवायु न्युनिकरण तथा अनुकुलनका लागि योगदानमा अधारित राष्टिय कार्ययोजना (एनडिसि) कार्यन्वयनमा ल्याएको छ। सो योजना अनुसार १५ हजार मेघावाट जल विद्युत लगायथको उर्जा उत्पादन गर्ने सरकारी घोषणा आएको छ।

यही प्रसंगमा उहाँले थप्नु भयो-' अहिले निकुन्ज, शिकार आरक्ष लगायतको संरक्षित बन क्षेत्रले कतिपय आदिवासीहरुलाई विस्थापित गराएको, मानव अधिकार हनन् गरेको समाचार आइरहँदा यो योजनाले ४५ प्रतिशत बन क्षेत्र विस्तार गर्ने कुरा उल्लेख गरेको छ। यो आफैमा गम्भीर बिषय हो।'

खनिज पदार्थको बढ्दो माँग

इन्टरनेशनल इनर्जी एजेन्सीको प्रतिवेदनले सन् २०४० सम्ममा स्वच्छ उर्जाको लागि खनिज पदार्थको माग चैगुनाले वृद्धि हुने पूर्वानुमान गरेको छ। एजेन्सीको प्रतिबेदन अनुसार अवको संसारमा विद्युतीय सवारी साधन र ब्याट्रीभण्डारण उद्योग सबैभन्दा ठुलो हुने बताएको छ।

विद्युतिय सवारी साधनको ब्याट्री उत्पादनको लागि महत्वपूर्ण लिथियम खनिजपदार्थको आवश्यकता अर्को दशकमा १० गुना वढ्ने समेत सो संस्थाका वैज्ञानिकहरुले अनुमान गरेका छन्। त्यस्का लागि प्रत्येक वर्ष नयाँ लिथियम खानी उत्खनन परियोजना संचालन हुनुपर्ने छ।

लिथियम, निकेल, कोबल्ट, तामा जस्ता खनिज पर्दाथ उत्खनन गर्न संचालित खानीको वृद्धिले आदिवासी जनजातिलाई आफ्नो भूमि र भूक्षेत्रबाट विस्थापन गर्ने खतर बढाउनेछ। किनभने आदिवासीको भूमि र भूक्षेत्रमा यस्ता खनिज पदार्थहरुको भण्डारण रहेका छन्।

संयुक्त राज्य अमेरिकामा मात्रै ९७ प्रतिशत निकल, ८९ प्रतिशत तामा, ७९ प्रतिशत लिथियम र ६८ प्रतिशत कोबल्ट लगायतका धातुहरुको भण्डारणहरु आदिवासी जनजातीहरु अर्थात नेटिभ अमेरिकनहरुको भुमि र भूक्षेत्रमा पाइन्छ। विश्वव्यापीरुपमा खानीले तिन करोड स्क्वाएर किलोमिटर भूभागलाई नस्ट गरिसकेको छ भने, लगभग ८ प्रतिशत संरक्षित क्षेत्रहरु, ७ प्रतिशत जैविक विविधता भएको क्षेत्र र १६ प्रतिशत वन्यजन्तु भएको क्षेत्रलाई सखाप पारेको छ।

बिजनेस एण्ड ह्युमन राईट्स रिसोसेज सेन्टरका अनुसार करिब १२ वर्षको अवधीमा मात्रै ११५ वटा खानी संचालकहरुले करिब ५१० वटा मानव अधिकार हनन गरेका घटनाहरु सार्वजानिक भएका छन्। ति मध्ये ४९ वटा घटनाहरु अदिवासी जनजातिहरुसँग सम्बन्धीत छन। यो एक प्रतिनिधिमुलक तथ्याङक मात्र हो। सन् २०२२ मा भएका घटनाहरुमध्ये लगभग ४० प्रतिशत आक्रमणका घटनाहरु खानी संचालकहरुले आदिवासी जनजातिहरुमाथी गरेका थिए।

धेरैजसो खानी उत्खनन जस्ता विकास आयोजनाहरु आदिवासी जनजातिहरुको स्वतन्त्र, पूर्व जानकारी सहितको मञ्जुरीवेगर हुन्छन् र ती विकास आयोजनाले दीर्घकालिन असर गरेका हुन्छन्।

छोटो अवधिको असरको कुरा गर्दा अन्यत्रबाट कामदारहरु आउँदा उनीहरुले नयाँ रोग र संक्रमणहरु ल्याउनुको साथै अपराधिक गतिविधि, लागुपदार्थ र मदिराको प्रयोगमा वृद्धि, आदिवासी महिलाविरुद्ध हिंसाका घटना वढ्ने र स्थानीय तहका पुर्वधारहरुमा हस आउँदछ। त्यसैगरी, जर्बजस्ती बसाईसराई, विकासको विरुद्ध आवज उठाउने मानव अधिकार प्रतिरक्षकको हत्या, भूमि, खानेपानी र अन्य जिवन निर्वाहका स्रोतहरु र वातावरणीय असरहरु पर्दछ।

हरित र नवीकरणीय उर्जाका प्रविधिहरुको लागि आवश्यक खनिज पदार्थहरुको माग विश्वमा बढ्दै जाँदा, आदिवासी जनजातिहरुले आफ्नो भूमि र भूक्षेत्रमा संचालित खानीहरुको बारेमा सचेत हुन जरुरी छ।

संघर्षका कथाहरु

दक्षिण अमेरिकामा, आदिवासी जनजातिहरु अफ्नो परम्परागत भूमि र भुक्षेत्रभित्र संचालित खानीहरुको विरुद्ध लडिरहेका छन्। अर्जेन्टीनामा खानी संचालन गर्ने कम्पनीहरुले आदिवासी जनजातिहरुको स्वतन्त्र, पूर्व जानकारी सहितको मञ्जुरीको अधिकार सुनिश्चित नगरी लिथियम खानी शुरु गरेको हुँदा अहिले ३३ कोज्या र अटाकमा आदिवासीहरुले एकजुट भएर आफ्नो भूमिभित्र संचालित खानी विरुद्ध लडिरहेका छन्।

विद्युतिय सवारी साधनको व्याट्रीको बढ्दो माग भएपछि कम्पनीहरुले चिलीको उत्तरी जिल्ला आटाकामा साल्ट फ्लाटमा व्यापकरुपमा लिथियम खनिज उत्खनन कार्य शुरु गरेका थिए। सो उत्खनन्बाट आदिवासी जनजातिहरुले जलस्रोत, जैविक विविधता र समुदायमाथी असर पारेपछि लिकनान्ते आदिवासीहरुले खानी उद्योग विरुद्धको लडाइमा सफलता प्राप्त गरेका छन्। सन् २०१९ मा आदिवासीहरुको विरोधको कारण लिथियम खानी परियोजना बन्द गरियो। तथापि अन्य ठाउँहरुमा संचालित खानीहरु बन्द गराउने क्रम छ।

मध्ये अमेरिका ग्वाटेमालामा, ग्वाटेमालाको सबैभन्दा ठुलो ताल, इजाबाल तालको किनारामा संचालित फेनिक्स निकेल खानीमा अहिले हिंसात्मक द्वन्द्वको रुप लिएको छ। ग्वाटेमालामा गृहयुद्धको बेला सन् १९६० तिर आदिवासीको मञ्जुरीवेगर ती खानीहरु शुरु गरिएका थिए।

सन् २००७ मा वर्दीधारी खानीका कामदार हरुले ११ जना क्याची आदिवासी महिलाहरुलाई सामुहिक बलत्कार गरेर उनीहरुको घर जलाइदिएर, आफ्नो थातथलोबाट विस्थापन गराएका थिए। सन् २००९ मा खानीमा तैनाथ सुरक्षाकर्मीहरुले क्याची आदिवासी मानव अधिकारकर्मीहरुमाथी गोलि चलाएका थिए। सो घटनामा क्याची आदिवासीका नेता एडोल्फो इचको मृत्यु भएको थियो।

सन् २०१७ मा माछा माररेर जिबीकोपार्जन गर्दै आएका कार्लोस माज कोकले तालको पानी खानीको कारण दुषित भएको भन्दै शान्तीपुर्ण आन्दोलन गरेका थिए। उनलाई आन्दोलनकै क्रममा पनि गोलि हानी हत्या गरियो। सन् २०२१, अक्टोबरमा, ग्वाटेमालका राष्ट्रपतिले मार्शल ल अर्थात कानून नै पास गरेर खानीको बिरोधमा आन्दोलन गर्ने क्याची आदिवासीहरुको सबै नागरिक अधिकारहरु निलम्बन भएको घोषणा गरे।

आदिवासीहरुको भूमि र भूक्षेत्रमा खनिज पर्दाथहरुको ठुलो भण्डार रहेका छन्। तसर्थ यी खनिज पदार्थहरुको उत्खनन र निकासीको लागि योजनाहरु बनी सकेका हुनसक्छन्। कतिपय ठाउँमा परियोजनाहरु समेत संचालन भैसकेका छन्।

त्यसैगरी उत्तरी अमेरिकाका आदिवासीहरुले पनि खानीको विरुद्ध बोलिरहेका छन्। नभाडाका, रातो पहाडका आदिवासी भनिने अत्सा कुडाखु यून्यू आदिवासीहरुले नाभाडामा संचालित थाकरपास लिथियम खानीको बिरोध गर्दै आएका छन्। उनीहरुका अनुसार यो खानीले फोर्ट म्याक्डेर्मिट पाईउट शोशोने आदिवासीको पुर्ख्यौली चिहान र खानेपानीको मुहानहरु नष्ट गरेको धर्मिक जीवजन्तु, पशुपंक्षीहरु र वातावरणमाथी नकरात्मक असर पुगेको भन्दै बिरोध जनाउँदै आएका छन्।

अफ्रिकामा, कङगोपछि, तामा र कोबल्ट निर्यात गर्ने देश हो जाम्बीया। जाम्बीयामा तामा र कोबल्ट धातुको ठुलो भण्डार छ। हाल, जाम्बीयाको कुल गार्हस्थ्य उत्पादनको करिब १० प्रतिशत अर्थतन्त्र खानी उद्योगले धानेको छ।

कोबल्ट र तामा दुबैले हरित उर्जा उत्पादनमा धेरै योगदान गर्ने भएपनि, जाम्बीयामा तामा र कोबल्ट उत्खनन गरिएको छैन। अमेरिकाको नीजि कम्पनीहरुले जाम्बीयामा तामा र कोबल्ट उत्खनन गर्ने चासो देखाएका छन्। तर ति कम्पनीहरुले आदिवासीको सवाललाई सम्बोधन गर्लान कि नगर्लान त्यो भने सोचनिय छ।

आदिवासी जनजातिहरुको भूमि र भुक्षेत्रमा संचालित खनिज पदार्थको खानी र आदिवासी जनजातिको सरोकारको विषयहरु बारेमा केही उदाहरणहरु मात्र हुन्। ति खानीहरुले वातावरणमा नकरात्मक असर ल्याएका छन्। पानी र हावामा प्रर्दुषण गरेका गरेका छन् र सामाजिक द्वन्द समेत सृजना गरेका छन्।

इन्डिजियसबाट

## पचास प्रतिशत मानिस मधुमेह बारे अन्जान

एजेन्सी। मधुमेह एक बढ्दो विश्वव्यापी स्वास्थ्य समस्या हो जसको जोखिम युवाहरूमा पनि बढ्दै गएको छ। एक तथ्यांक अनुसार सन् २०२१ मा २० देखि ७९ वर्ष उमेर समूहका ५३ करोड ७० लाख (५३.७ करोड) वयस्क मधुमेहबाट पीडित थिए, अर्थात् प्रत्येक १० जनामा एक जनामा यो रोग थियो। समयसँगै यो समस्या बढ्दै गएकाले स्वास्थ्य विज्ञहरुले सबैलाई सावधानी अपनाउन सुझाव दिएका छन्। सन् २०३० सम्ममा मधुमेहका बिरामीको संख्या ६४ करोड ३० लाख (६४.३ करोड) र सन् २०४५ सम्म ७८ करोड ३० लाख (७८.३ करोड) पुग्ने विज्ञहरूको अनुमान छ।

जीवनशैली र खानपानमा खराबीलाई टाइप-२ मधुमेहको प्रमुख कारण मानिन्छ। यसको सुधारका लागि सबैले ध्यान दिनुपर्ने चिकित्सकहरू बताउँछन्। जसको परिवारमा पहिले देखि नै मधुमेह छ उनीहरुको लागि यो धेरै सावधान रहनु महत्त्वपूर्ण छ।

विश्वव्यापी रूपमा बढ्दै गएको यो गम्भीर र दीर्घकालीन रोगबारे मानिसहरूलाई सचेत गराउने र यसको रोकथामका लागि जनचेतना जगाउने उद्देश्यले हरेक वर्ष नोभेम्बर १४ मा विश्व मधुमेह दिवस मनाइन्छ।

मुलुकमा मधुमेह रोग लागेका तर यसबारे अनभिज्ञ रहेको भन्दै विज्ञहरूले चिन्ता व्यक्त गरेका छन्। यस्तो अवस्थाले गम्भीर स्वास्थ्य समस्या निम्त्याउन सक्छ।

**आधाभन्दा बढी मानिस यो रोगबारे अनभिज्ञ छन्**

मधुमेहको जोखिमका सम्बन्धमा विश्व स्वास्थ्य संगठन (डब्लुएचओ) ले एक प्रतिवेदनमा देशका ५० प्रतिशतभन्दा बढी मानिसलाई आफ्नो मधुमेहको अवस्थाबारे जानकारी नभएको बताएको छ। यदि समयमै यसको निदान र उपचार गरिएन भने, धेरै गम्भीर स्वास्थ्य जटिलताहरू विकास हुन सक्छ।

मधुमेहमा चिनीको मात्रा सामान्यभन्दा बढी रहन्छ, यसलाई नियन्त्रण गर्न औषधि वा उपचार नगरेमा समयसँगै आँखा, मृगौला बिग्रने र स्नायुसम्बन्धी समस्या हुने खतरा रहन्छ।

**मधुमेहको गम्भीर अवस्था**

दक्षिण एशियामा अनुमान गरिएको छ कि १८ वर्ष भन्दा माथिका ७७ मिलियन (७.७ करोड) मानिसहरू टाइप-२ मधुमेहबाट पीडित छन् र लगभग २५ मिलियन पूर्व-मधुमेह छन्, जो नजिकै मधुमेह विकासको उच्च जोखिममा हुन सक्छ। ५० % भन्दा बढी मानिसहरूलाई थाहा छैन कि उनीहरूलाई मधुमेह छ, जुन गम्भीर चिन्ताको विषय हो।

मधुमेह भएका मानिसहरूमा हृदयघात र स्ट्रोकको जोखिम दुईदेखि तीन गुणा बढी हुन्छ। मधुमेहको गम्भीर अवस्थामा खुट्टामा रगतको प्रवाह कम हुन्छ। थप रूपमा, न्यूरोपैथी (स्नायु क्षति) ले खुट्टामा अल्सर, संक्रमण, र अन्ततः केही व्यक्तिहरूमा विच्छेदन गर्न सक्छ।

**तपाईलाई पनि मधुमेह भएको कसरी थाहा पाउने ?**

स्वास्थ्य विज्ञहरुका अनुसार केहि लक्षणहरुबाट थाहा पाउन सकिन्छ कि तपाईलाई यो रोग छ कि छैन ? जसका आमाबुबा मधुमेहबाट पीडित छन्, उनीहरूले विशेष ख्याल गर्नुपर्छ। मधुमेहमा चिनीको मात्रा बढेपछि धेरै प्रकारका स्वास्थ्य समस्याहरू देखा पर्न सक्छन्।

मधुमेहबाट पीडित व्यक्तिहरूलाई बारम्बार पिसाब लाग्ने समस्या हुन्छ (विशेष गरी रातमा)। तपाईलाई धेरै तिर्खा लाग्न सक्छ, अस्पष्ट तौल घटेको छ, थकित वा कमजोर महसुस हुन सक्छ, तपाईको हात वा खुट्टामा सुन्न वा झनझन हुन सक्छ, घाउहरू निको हुन लामो समय लाग्न सक्छ, वा तपाइँ मधुमेहबाट पीडित हुनुहुन्छ।

**मधुमेह राजधानी दक्षिण एशिया**

दक्षिण एशियामा बढ्दो मधुमेह रोगीहरूको संख्याको कारण वयस्क जनसंख्याको लगभग १० देखि १२% मधुमेहबाट पीडित छन्। यो रोगले स्वास्थ्य क्षेत्रमा दबाब दिनुका साथै अन्य धेरै रोग निम्त्याउने भएकाले यसबाट जोगिन निरन्तर प्रयास गर्नुपर्ने स्वास्थ्य विज्ञहरुको भनाइ छ।

# नेपाल प्रिमियर लिग : फ्रेन्चाइज लिगको तयारी तीव्र

काठमाडौं । नेपाल क्रिकेट संघ (क्यान) को आयोजनामा आगामी मंसिरबाट फ्रेन्चाइज क्रिकेट नेपाल प्रिमियर लिग (एनपीएल) आयोजना हुँदैछ। अहिलेसम्मको सबैभन्दा ठूलो फ्रेन्चाइज लिगको रुपमा रहेको एनपीएलको तयारी तीव्र रुपमा भइरहेको क्यानले जनाएको छ ।

फ्रेन्चाइजहरु अहिले टिम तयारी गर्ने, प्रशिक्षण गर्ने, ट्यालेन्ट हन्ट गर्ने, जर्सी, रिभेलदेखि ब्राण्ड एम्बासडर घोषणा गर्नेसम्म काममा व्यस्त रहेका छन् । आयोजक क्यान मैदानको तयारी गर्ने स्पोनर र ब्रोडकास्टर फिक्स गर्ने तयारीमा छ । समर्थकहरु लिगका लागि प्रतीक्षा गरेर बसिहरका छन् ।

अहिले सम्म ३० भन्दा बढी विदेशी खेलाडीहरु एनपीएल खेल्न अनुबन्ध भइसकेकोले धेरै विदेशीको खेल हेर्न पाइनेछ। यस्तै प्रशिक्षकहरु भने धेरै जसो विदेशी नै छन् । घरेलु खेलाडीहरू पनि ठूलो संख्यामा एनपीएलमा सहभागी हुँदैछन् । यस्तै ट्यालेन्ट हन्टमा पनि क्रिकेटरहरुको उत्साहजनक सहभागिता छ ।

नेपाली क्रिकेटमा एनपीएलले ठूलो परिवर्तन ल्याउने र क्रिकेट विकासमा सहयोग गर्ने र इँटा थप्ने काम गर्ने क्यानको विश्वास छ । क्यानका सचिव पारस खड्काको संयोजत्कवमा रहेको एनपीएलमा गभर्निङ काउन्सिलका क्यानका कोषाध्यक्ष पदम खड्का र क्यान सदस्य सुदिप शर्मा छन् ।

कहिले हुन्छ एनपीएल ?

क्यानको आयोजनामा हुन लागेको पहिलो नेपाल प्रिमियर लिग (एनपीएल) मंसिर १५ देखि पुष ६ गते (नोभेम्बर ३० देखि डिसेम्बर २१) सम्म हुनेछ ।

एनपीएलमा सहभागी टिम संख्या ?

एनपीएलमा कूल ८ फ्रेन्चाइज टोलीको सहभागिता रहनेछ । त्यसमध्ये तीनवटा टोलीको प्रदेश र पाँचवटा टोलीको सहरको नामबाट नामाकरण गरिएको छ । सातवटै प्रदेशबाट प्रतिनिधित्व हुने गरी टिम निर्माण गरिएको छ भने बागमती प्रदेशबाट दुई फ्रेन्चाइज छन् । कोशी प्रदेशबाट विराटनगर किंग्स, मधेश प्रदेशबाट जनकपुर बोल्ट्स, बागमती प्रदेशबाट काठमाडौं गुर्खाज र चितवन राइनोज, गण्डकी प्रदेशबाट पोखरा एभेन्जर्स, लुम्बिनी प्रदेशबाट लुम्बिनी लायन्स, कर्णाली प्रदेशबाट कर्णाली याक्स र सुदूरपश्चिम प्रदेशबाट सुदूरपश्चिम रोयल्स छन् ।

एनपीएल कुन मैदानमा हुन्छ ?

एनपीएल कीर्तिपुरस्थित टियूको मैदानमा हुनेछ । नेपालमा अन्तर्राष्ट्रियस्तरको एक मात्र खेल मैदान टियू रहेकोले एनपीएलको पहिलो संस्करण टीयू मैदानमा मात्र गर्ने क्यानको तयारी छ ।

एक टिममा रहने खेलाडी संख्या ?

एनपीएलका लागि एक टिममा कम्तीमा १६ खेलाडी हुनुपर्नेछ । जसमा एक जना मार्की खेलाडी छन् भने हरेक फ्रेन्चाइजले अक्सनबाट १० खेलाडी अनुबन्ध गरिसकेका छन् । यस्तै हरेक टिमले ४ विदेशी खेलाडी अनिवार्य राख्नुपर्नेछ । विदेशी खेलाडीको उपलब्धता हेरेर एक फ्रेन्चाइजले ६ जनासम्म विदेशी खेलाडी राख्न पाउनेछन् ।

यसैगरी ट्यालेन्ट हन्टबाट पनि हरेक टिमले एक खेलाडी टिममा राख्नुपर्नेछ। ट्यालेन्ट हन्टमा धेरै खेलाडी सहभागी भइरहेका छन्। फ्रेन्चाइजले मुख्य टोलीमा एक खेलाडी मात्र राखेपनि ट्यालेन्ट हन्टबाट केही खेलाडी टिमसँगै प्रशिक्षण गर्नेगरी छनोट गर्न सक्नेछन् । एक टिममा १६ खेलाडीको हिसाबमा पनि पुरै फ्रेन्चाइजमा १२८ खेलाडी सहभागी हुनेछन् ।

विदेशी खेलाडी कति हुनेछन् ?

एनपीएलमा हरेक फ्रेन्चाइजले ४ विदेशी खेलाडी अनुबन्ध गर्नुपर्नेछ। यसरी हेर्दा एनपीएल खेल्नका लागि कूल ३२ खेलाडी नपाल आउने पक्का छ। त्यसमा विदेशी खेलाडी ६ जनासम्म अनुबन्ध गर्न पाउने नियम छ । कुनै विदेशी खेलाडी प्रतियोगिताको बिचमै छाडेमा त्यहाँ ६ जनाबाट त्यसको अर्को रिप्लेसमेन्ट राख्न पाउनेछ ।

एनपीएलका लागि अहिलेसम्म अनुबन्धका भएका ठूला नाममा विश्व चर्चित न्युजिल्याण्डका मार्टिन गप्टिल, जिम्मी निसम र स्कट कुगेलेइन, अष्ट्रेलियाका बेन कटिङ र दक्षिण अफ्रिकाका मर्चेन्ट डे ल्याङ छन् । त्यसबाहेक इंग्ल्याण्डको काउन्टी र भाइटालिटी ब्लास खेलेका खेलाडी धेरै छन् ।

यसैगरी अष्ट्रेलिया, न्युजिल्याण्ड र दक्षिण अफ्रिका बाहेक टेष्ट राष्ट्र वेष्ट इन्डिज, इंग्ल्याण्ड, पाकिस्तान, अफगानिस्तानका खेलाडीहरु पनि अनुब्नध भएका छन् । एशोसिएट राष्ट्र नेदरल्याण्ड्स, स्कटल्याण्ड, यूएई, नामिबिया, अमेरिका, ओमान, क्यानडा, हङकङका खेलाडीहरू पनि एनपीएलमा अनुबन्ध भएका छन् । नेपाल बाहेक कूल १५ देशका खेलाडीहरू एनपीएल खेल्न आउँदैछन् ।

खेल लाइभ हेर्न पाइन्छ ?

एनपीएलको ब्रोडकास्टिङ राइटबारे अहिलेसम्म केही घोषणा भएको छैन। एनपीएलको कमर्सियल राइट्स पाएको ब्राण्ड लजिकले विश्व चर्चित भारतीय स्टार स्पोर्ट्ससँग प्रत्यक्ष प्रशारणको लागि कुरा भइरहेको बताए पनि अन्तिम निर्णय भएको छैन ।

विजेता कति पुरस्कार पाउनेछन् ?

क्यानले एनपीएलको विजेताले पाउने पुरस्कार घोषणा गर्न बाँकी छ ।

एनपीएलमा यसपटक घरेलुभन्दा विदेशी प्रशिक्षक धेरै छन् । सहभागी ८ मध्ये ५ टिममा विदेशी प्रशिक्षक छन् । त्यसमा पनि दुई जना राष्ट्रिय टिमका पूर्वप्रशिक्षक पनि छन् । यस्तै अर्का प्रशिक्षक नेपाली राष्ट्रिय टिमको ब्याटिङ कन्सलट्यान्टको रुपमा रहेका प्रशिक्षक पनि छन् । नेपाली राष्ट्रिय टिम सम्हालिसकेका पुबुदु दासानायके र उमेश पटवालसँगै आइपीएलमा चेन्नाइको सहायक प्रशिक्षक रहेका राजीव कुमार, नेपालको कन्सलट्यान्ट प्रशिक्षक नन्दन फाडनिस र आयरल्याण्डका पूर्वक्रिकेटर केभिन ओब्रायन प्रशिक्षकको रुपमा छन् ।

नेपालबाट राष्ट्रिय टिमका पूर्वप्रशिक्षक जगत टमाटा, पूर्वसहायक प्रशिक्षक बसन्त शाही ठकुरी अनि राष्ट्रिय टिमका पूर्वकप्तान तथा नेपाल ए टिमका प्रशिक्षक रहिसकेका ज्ञानेन्द्र मल्ल छन् ।

टिम तिनका खेलाडी कस्ता छन् ?

१. विराटनगर किंग्स

सन्दीप लामिछाने, प्रतिश जिसी, लोकेश बम, बसिर अहमद, जितेन्द्र मुखिया, राजेश पुलामी, दिपक बोहरा, सुवास भण्डारी, नरेन भट्ट, मृनाल गुरुङ, अनिल खरेल

विदेशी खेलाडी : मार्टिन गप्टिल, अकिब इल्यास, निकोलस किर्टोन, क्रिस सोल

मुख्य प्रशिक्षक : केभिन ओ'ब्रायन

२. जनकपुर बोल्ट्स

आसिफ शेख, अनिल शाह, ललित राजवंशी, हेमन्त धामी, किशोर महतो, शेर मल्ल, आकाश त्रिपाठी, शुब कंसाकार, रुपेश सिंह, तुल थापा, अरनिको यादव

विदेशी खेलाडी : जिम्मी निसम, जोसुआ ट्रोम्प, मोहमद मोहसिन, लहिरु मिलान्था, सोहेब मक्सुद

मुख्य प्रशिक्षक : पुबुदु दासानायके

३. काठमाडौं गुर्खाज

करण केसी, भीम शार्की, शाहब आलम, रासिद खान, दिपेश कँडेल, कृष्ण कार्की, सुमित महर्जन, शंकर राना, राजु रिजाल, प्रतीक श्रेष्ठ, विवेक केसी

विदेशी खेलाडी : माइकल लेभिट, जेरार्ड एरासमस, स्टेफेन इस्कीनाजी, डान डौथवेट

मुख्य प्रशिक्षक : बसन्त शाही ठकुरी

४. चितवन राइनोज

कुशल मल्ल, रिजन ढकाल, कमल सिंह ऐरी, शरद भेषावकर, दिपेश श्रेष्ठ, अमरसिंह राउटेला, दीपक बोहरा, सन्तोष कार्की, गौतम केसी, रन्जित कुमार, विपिन रावल

विदेशी खेलाडी : मर्चेन्ट डे ल्याङ, लुक बेनकेन्स्टेइन, हसन एइसाखिल, निकोल जान लोफ्टी-इटन

मुख्य प्रशिक्षक : उमेश पटवाल

५. पोखरा एभेन्जर्स

कुशल भुर्तेल, सागर ढकाल, आकाश चन्द, दिलिप नाथ, सुनाम गौतम, तृत राज दास, नारायण जोशी, विपिन खत्री, अमृत गुरुङ, दिनेश खरेल, किरण ठगुन्ना

विदेशी खेलाडी : आन्द्रेस गौस, एन्डरसन फिलिप, बास डे लिड, म्याट क्रिटले, रेमोन रेइफर

मुख्य प्रशिक्षक : राजीव कुमार

मेन्टर : जोनट् रोड्स

६. लुम्बिनी लायन्स : रोहित कुमार पौडेल, सन्दिप जोरा, सूर्य तामाङ, अर्जुन साउद, विवेक यादव, आशुतोष घिरैया, तिलक राज भण्डारी, दुर्गेश गुप्ता, दिनेश अधिकारी, विकास आग्री, अभिषेक गौतम

विदेशी खेलाडी : बेन कटिङ, टम बुर्स, उन्मुक्त चन्द,

मुख्य प्रशिक्षक : नन्दन फाडनिस

कन्सलट्यान्ट प्रशिक्षक : शक्ति गौचन

७. कर्णाली याक्स टोली

सोमपाल कामी, गुल्शन झा, देव खनाल, नन्दन यावद, अर्जुन घर्ती, रित गौतम, मौसम ढकाल, भुवन कार्की, दीपेन्द्र रावत, युनिशविक्रम सिंह ठकुरी, दीपक डुम्रे

विदेशी खेलाडी : हुसेन तलात, बाबर हायत, चाडविक वाल्टन,'.

मुख्य प्रशिक्षक र क्रिकेटर डिरेक्टर : ज्ञानेन्द्र मल्ल

८. सुदूरपश्चिम रोएल्स

दीपेन्द्र सिंह ऐरी, आरिफ शेख, अविनाश बोहरा, विनोद भण्डारी, नरेश बुढाएर, इशान पाण्डे, अर्जुन कुमाल, अमित श्रेष्ठ, नरेन साउद, खडक बोहरा, भोज राज भट्ट

विदेशी खेलाडी : ब्राण्डन म्याकमुलेन, सैफ अली जैब, स्कट कुगेलेइन, रोहन मुस्ताफा

मुख्य प्रशिक्षक : जगत टमाटा

# उपत्यकाब्यापी अन्तरपालिका उपमेयर कप एकायन कराँते प्रतियोगिताका सम्पन्न

काठमाडौं । प्रथम काठमाडौं महानगरपालिका उपमेयर कप उपत्यकाब्यापी अन्तरपालिका एकायन कराँते प्रतियोगिताका सम्पन्न भएको छ । काठमाडौं महानगरपालिकासंगको सहकार्यमा नेपाल एकायन कराते संघले आयोजना गरेको दुई दिने सो प्रतियोगिता आइतवार सम्पन्न भएको हो ।

काठमाडौं महानगरपालिकाका उपमेयर सुनिता डंगोलको प्रमुख आतिथ्यतामा सम्पन्न समापन समारोहमा इमेज च्यानलका महाप्रबन्धक रघुवर भक्त मानन्धर, काठमाडौं जिल्ला खेलकुद विकास समितिका अध्यक्ष भाईकृष्ण बलामी, एन आर एन उपाध्यक्ष रोजिना प्रधान राईलगायतले विशेष आतिथ्यता रहेको थियो ।

समापन समारोहका अवसर बोल्दै काठमाडौं महानगरपालिकाका उपमेयर डंगोलले महानगरपालिकासंगको सहकार्यमा नेपाल एकायन कराते संघले सफलतापूर्वक प्रतियोगिता सम्पन्न गरेको प्रति सन्तोष व्यक्त गर्दै आगामी दिनमा पनि निरन्तर सहयोग रहने बताइन ।

प्रतियोगिताले खेलाडीहरुको प्रतिभा र क्षमता प्रदर्शन गर्न सहयोग पुगेको प्रष्ट पार्दै उनले खेलकुदलाई महानगरले महत्वका साथ् अघि बढाइरहेको बताउँदै समापन समारोहमा प्रतियोगिताका विजयी खेलाडीहरुलाई नगद पुरस्कार, प्रमाणपत्र, मेडल तथा ट्रफीबाट पुरस्कृत गरेकी थिइन् ।

समापन समारोहमा नेपाल एकायन करातेका तर्फबाट काजकिस्तानमा २०२४ जुलाई १५ देखि १९ सम्म सञ्चालित अन्तर ाष्ट्रिय स्ट्रेन्थ लिफ्टिङ च्याम्पियनशिप प्रतियोगिताको इन्क्लाईण्ड बेन्च प्रेस स्पर्धामा प्रथम स्थान हासिल गरी स्वर्ण पदक प्राप्त गर्न सफल खेलाडी केदारेश्वर मान स्थापितलाई दोसल्ला तथा प्रमाणपत्रबाट सम्मानित गरिएको थियो ।

समापन समारोह एकायन करातेका जन्मदाता एवं नेपाल एकायन करातेका संस्थापक अध्यक्ष श्रीकृष्ण डंगोलको सभापतित्वमा भएको थियो भने कार्यक्रम संयोजक रहेका नेपाल एकायन कराते संघका सल्लाहकार एवं साउथ एसियन एकायन कराते फेडेरेसनका प्रथम उपाध्यक्ष शशी कपालीले स्वागत मन्तव्य राखेका थिए ।

उक्त अवसरमा काठमाडौं जिल्ला खेलकुद विकास समितिका अध्यक्ष भाईकृष्ण बलामी, नेपाल एकायन कराते संघका केन्द्रिय सल्लाहकारहरु निरोज कर्माचार्य, शंकर महर्जन, रमेश मान मुनिकार, धर्मदेव महर्जन, वीरकृष्ण श्रेष्ठ, राजन महर्जन, प्रेमनाथ श्रेष्ठ, राजकुमार श्रेष्ठ, प्रेम लामा, प्रविण काजी श्रेष्ठ, केदार मान स्थापित, लगायतको उपस्थित रहेको थियो ।

प्रतियोगितमा निर्णयाकमा राजेन्द्र शाक्य, सिर्जन अधिकारी तथा भरत धौलाकोटी रहेका थिए भने मुख्य निर्णायक किशोर तामाङ, बिष्णु मान शाक्य र रुपेश मगर त्यसैगरी निर्णायकहरुमा समसेर लामा, राम तामाङ, शंकर धौलाकोटी, सुरेश धौलाकाटी, बिवेक थापा मगर, सजिन महर्जन, उर्मिला बिश्वकर्मा, हिमाल सागर मनोज राजबहाक, राजेन्द्र तामाङ, श्रीराम राणा, सरोज तामाङ, विवेक बर्देवा, राजु तामाङ, निशु तामाङ र नारायण लामा रहेका आयोजकले जनाएको छ ।

प्रतियोगितामा महिला तर्फ ६ (छ) तथा पुरुष तर्फ ८ (आठ) गरी कुल १४ वटा तौल समूहहरुमा खेल संचालन भएका थिए । काठमाडौं उपत्यका भित्रका १२ वटा नगरपालिकाहरुका करिब १ सय ९४ जना एकायन कराते खेलाडीहरु सहभागी रहेको थियो ।

प्रतियोगितामा प्रथम हुने खेलाडीले नगद पुरस्कार जनही रु २० हजार सहित स्वर्ण पदक, प्रमाण पत्र तथा ट्रफी पाए । यसैगरी द्वितीय हुने खेलाडीले नगद पुरस्कार जनही रु १२ हजार सहित रजत पदक, प्रमाण पत्र तथा ट्रफी र तृतिय हुने खेलाडीले नगद पुरस्कार जनही रु ७ हजार सहित कासय पदक, प्रमाण पत्र तथा ट्रफी पाए । चौथो स्थान हासिल गर्ने खेलाडीले पदक तथा प्रमाण पत्र प्राप्त गरेका छन् । यसैगरी सहभागी सम्पूर्ण खेलाडी तथा खेल पदाधिकारीहरुलाई प्रमाण पत्रबाट सम्मानित गरिएको थियो ।

प्रथम काठमाडौं महानगरपालिका उपमेयर कप उपत्यकाव्यापि अन्तरपालिका एकायन कराते प्रतियोगिताका २०८१ को महिला तौल समूहमा ३५ के.जी. मुनि तौल समूहमा रेखा रोकाया प्रथम, साक्षी ढकाल द्वितीय, सुप्रिया के. सी. तृतीय र आर्या महर्जनले चौथो स्थान प्राप्त गरेका छन् । ४० के.जी. मुनि तौल समूहमा क्रमश सिवानी आले मगर, आराध्या घिमिरे, प्राप्ना अधिकारी र ऋतु उप्रेती प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

४५ के.जी. मुनि तौल समूहका कृपा खड्का, आयुषा तामाङ्ग, अन्जना तामाङ्ग र आकृती थापा प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् । ५० के.जी. मुनि तौल समूहमा रेश्मीला राई, सभ्यता नेपाली, रानी तामाङ्ग र आयुष्मा थापा मगर प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

५५ के.जी. मुनि तौल समूहमा निषा तामाङ्ग, आस्था तामाङ्ग, अन्जिला मगर र आयुषा गुरुङ्ग प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् । महिला खुल्ला तौल समूहमा अन्जना बुढाथोकी, एलिना थापा,र सिला श्रेष्ठ र मेलिना मगर प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

पुरुषतर्फ तौल समूहमा

२५ के.जी. मुनि तौल समूहका अरुण लामा, लविन कार्की, आयुष तामाङ्ग र कविर तामाङ्ग क्रमसः प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् । ३० के.जी. मुनि तौल समूहका विवेश जैशी , नरेश रावत, गौरव सुनुवार र रोजिव खत्री प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

३५ के.जी. मुनि तौल समूहका गणेश विष्ट, सायन भुजेल, महेन्द्र कार्की र युनिश श्रेष्ठ प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

४० के.जी. मुनि तौल समूहका प्रविन श्रेष्ठ, साजन नेपाली, निश्चल तामाङ्ग र करण घिसिङ्ग प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।४५ के.जी. मुनि तौल समूह सुवास शाही, समिर बराम, जोन राई र विवेक तामाङ्ग प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

५० के.जी. मुनि तौल समूह पवन तामाङ्ग, अनमोल श्रेष्ठ , किशोर न्यौपाने र वसन्त कुमाल प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।५५ के.जी. मुनि तौल समूह विराज मगर , सुवास नेपाली, रवि श्रेष्ठ र प्रविन आले मगर प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् । पुरुष खुल्ला तौल समूहमा दिनेश बम, अभिषेक तामाङ्ग, मनिष राई र विनय तामाङ्ग प्रथम, द्वितीय, तृतीय र चौथो भएका छन् ।

## आदिवासीलाई.....

बहुलक्षेत्रहरु हुन् । चितवन, नवलपरासी, दाङ, बाँके, बर्दिया, कन्चनपुर लगायतमा आदिवासी थारुको बाक्लो बसोबास रहेको छ। यो कार्यक्रम सफल नै भएको भएपनि आदिवासी जनजातिका कारण सफल भएको हो ।

आदिवासी जनजातिका भूमि र भूक्षेत्रमा उनीहरुको स्वतन्त्र, पूर्व जानकारी सहितको मञ्जुरीको अधिकारको सुनिश्चित नगरी नाफामूलक कार्यसञ्चालन गरिएको थियो । अझै पनि आफनो भूमि र भूभागमा राष्ट्रिय वन, निकुन्जले अतिक्रमण गरेको त्यहाँका स्थानीयहरुबाट गुनासो सुन्नु परेको छ । विस्थापनको मारमा परेर र आफनो जिविकोपार्जनको परम्परागत अभ्यासहरु मासेर गरिएको उपलव्धीलाई आदिवासी जनजातिहरुले स्यावासी दिन सक्दैनन् ।

स्वतन्त्र, पूर्व जानकार ीसहितको मञ्जुरीको अधिकार आदिवासी जनजातिको लागि विशेष अधिकार हो। यो अधिकारले आदिवासीको पुर्ख्यौली भूमी र भूक्षेत्रमा, प्राकृतिक स्रोतसाधानहरु, संस्कृतिक सम्पदालाई असर गर्ने गरी कुनै परियोजना संञ्चालन गर्न सकिदैन । तर सरकारले सन् २०१८ अगाडिबाट नै त्यस क्षेत्रमा यो परियोजना सञ्चालन गरिरहेको छ ।

जलवायु परिवर्तनका नाममा व्यापार

जलवायु परिवर्तनका नाममा अहिले व्यापार चलिरहेको छ। कार्बन व्यापार यसैको एउटा रुप हो । सरकारले अर्को चरणका लागि थप व्यापार गर्ने तयारी पनि गरेको छ । अव छिट्टै उत्सर्जन न्युनिकरणका लागि वनबित्त कार्यक्रम (लिफ साझेदारी) सञ्चालन गर्ने भएको छ । यो कार्यक्रम बागमती, गण्डकी र लुम्बीनी प्रदेशका जनजंगलमा सञ्चित कार्बन बेच्ने कुरा गरिएको छ ।

यसै गरी अमेरिका, बेलायत, नर्वे र दक्षिण कोरियाले जस्ता मुलुकसहित अमेजन, वालमार्ट, युनिलिभर कम्पनीहरु पनि कार्बन व्यापारमा नेपालसंग साझेदारी गर्न तयार भएका छन् । यो परियोजनाबाट तीन प्रदेशका ३२ लाख हेक्टर वनमा ७० लाख टन कार्बन सन्चिति गरिने लक्ष रहेको छ । यसबाट करीव १० करोड अमेरिकी डलर करीव १३ अर्ब रुपैण पाउने संभावना रहन्छ ।

विद्युतीय सवारीको व्यापार

देशमा विद्युतीय सवारी साधनको व्यापार बढेको छ । तर यसबाट हुन सक्ने जोखिमको लेखाजोखा गरिएको छैन । विद्युतीय सवारी साधन जलवायुमैत्री सवारी साधन भएपनि आदिवासीमैत्री भने होइन । विद्युतीय सवारी साधन चलाउन धेरै खनिज पदार्थ उत्खनन गर्नु पर्दछ । त्यस्ता खनिज पदार्थहरु आदिवासी जनजातिहरुको भूमि, भूक्षेत्रमा उपलव्ध हुन्छन् ।

नेपालले विद्युतीय सवार ीसाधानको प्रयोगबाट कार्बन उत्सर्जन घटाएको दावीसहित स्वच्छ वायु कार्बन व्यापारको तयारी थालेको छ । सरकारले कर सहुलियत दिएपछि नेपालमा विद्युतीय सवारी साधनको प्रयोगकर्ता बढेका छन् । पछिल्लो समयमा नेपालमा विद्युतीय सवारी साधन चलनउनेको संख्या ३५ हजार भन्दा बढी रहेको छ ।

विद्युतीय सवारीका लागि आवश्यक पर्ने ब्याट्री निर्माण गर्न विभिन्न थरीका धातु र खनिजपदार्थहरुको आवश्यकता पर्दछ र ती खनिज पदार्थहरुको माग पनि वढ्दै गएको पाटो पनि अर्को खतरनाक रहेको छ ।

विद्युतीय सवारीमा प्रयोग गरिने चुम्बकहरुको लागि पृथ्वीमा पाइने एकदमै दुर्लभ खनिज तत्वहरुको आवश्यक पर्दछ । त्यसैगरी, विजुली प्रयोग हुने प्रविधिहरुको लागि ठुलोमात्रामा तामाको आवश्यकता पर्दछ ।

जलवायु परिबर्तनको जोखिम घटाउन वनको विस्तार, जल विद्युत आयोजनासंगै स्वच्छ उर्जा प्रयोगको नाममा धेरै खानीहरु संञ्चालनमा आउनलागेका छन् । पछिल्लो समयमा खानी तथा खनिज पदार्थहरु उत्खनन र निकासी गर्ने उद्योगहरु फस्टाउन थालेका छन् । यस्ता खानी तथा खनिजहरु स्वभाविक रुपमा आदिवासीलाई विस्थापन गरेर, उनीहरुको भूमि कव्जा गरेर मात्र प्राप्त हुन्छ । वास्तवमा स्वच्छ उर्जाको नाम दिएपनि यसबाट आदिवासी जनजातिको अधिकार व्यापकरुपमा हनन हुने संभावना रहन्छ ।

## नेपालको....

नष्ट, कमजोर प्रमाण जुटाउने काम गरियो, गरिनेछ तर यो सत्यभन्दा पर जान सक्दैन । त्यस्तै अहिलेको कोशी प्रदेशका मन्त्रीको मानव तस्करीमा भएको संलग्नता पनि गम्भीर छ । यसलाई व्यक्तिको नैतिक पतन भनेर एमाले चाखिन खोज्ने नै छ। राजनीतिभित्र नैतिक अवस्थालाई कायम गर्ने हो भने यो मुद्दामा पार्टीभित्रको संलग्नतालाई पनि खोजी गर्नैपर्छ ।

अर्को, रास्वपाका अध्यक्ष रवि लामिछानेको कुरा गरौं । उनले सहकारीबाट आफ्नो नाममा पैसा नलिएको बताउँदै आएका छन् । अनुसन्धान चलेकै छ, अन्तिम अनुसन्धानले के देखाउँछ हेर्नैपर्नेछ । रवि लामिछानेले सहकारीबाट पैसा लिएर टेलिभिजन चलाएको र घाटा परेर तिर्न नसकेको भए उनी असफल व्यवसायी हुन्थे । त्यो असफलतामा देशमा आएको अर्थतन्त्रको ओरालो गति र अन्य प्रभाव पनि कारक हुन सक्थ्यो । सहकारीबाट करोडौं पैसा उनी संलग्न संस्थामा आउने, उनले १५ प्रतिशत सेयर लिने तर उनको नाम सिधै संलग्नतामा नदेखिनु भनेको डरलाग्दो वित्तीय घोटाला हो ।

सहकारीले कसरी त्यति ठूलो पैसा दियो ? सञ्चालकको गम्भीर बैठक हुन्छ, धितो के छ ? त्यो हेरिन्छ । बिनाधितो कसरी टेलिभिजनमा त्यति ठूलो पैसाको ऋण गयो ? प्रबन्ध निर्देशकले यसको स्रोत के हो ? कहाँबाट आम्दानी भएर यति मोटो तलव खाने, स्वाउँदो गरियो भन्ने कुरा थाहा नपाउने भनेको डरलाग्दो जाल बनाएर योजनाबद्ध रुपमा सहकारीको रकम अपचलन गरिएको हो । यसमा शंका गर्नु, निर्दोष देखाउन प्रयास गर्नु अर्को जालझेल नै हो । हुन त देशभरका अन्य ठूलो संख्याका सहकारीको पैसा हिनामिना गरिएको छ । ती सबैमा थोरै, धेरै यिनै कांग्रेस, एमाले तथा माओवादी केन्द्रका नेता, कार्यकर्ताहरु नै संलग्न छन् । कांग्रेसका उपसभापति रहेका धनराज गुरुंगको नाम पनि मुछिएको छ । अनुसन्धान अघि बढेको छैन । एमालेका विभिन्न तहका नेताहरु पनि मुछिएकै छन् । यो डरलाग्दो पूरै सहकारी घोटाला प्रकरणबाट ठूलो संख्याका जनता पीडित बन्न गएका छन् ।

भर्खरै एमालेले कलंकी नजिकै कीर्तिपुर क्षेत्रमा झण्डै ११ रोपनी जग्गा र त्यसमा बन्ने अत्याधुनिक भवन पार्टी अफिसका लागि दानमा पाउने कुरा पनि सामान्य होइन । यसको मूल्य एक अर्बभन्दा बढी पर्छ । त्यो जग्गा एमालेले विवादित व्यवसायी मीनबहादुर गुरुङबाट पाउने भनिएको छ । त्यति ठूलो रकम पर्ने संरचना दान दिने गुरुङ आफैं अवैध कारोबार र करछलीमा अदालतबाट साबित भएका व्यक्ति हुन् । त्यस्ता व्यक्तिबाट लिने सम्पत्तिमा राज्यदोहन गरेको पैसा नपरेर शुद्ध हुन सक्छ ? यसको बदला ती गुरुङले राज्यबाट कयौं गुणा धेरै राज्यस्रोत दोहन गर्ने लाइसेन्स एमालेबाट माग्दैनन् त ? उनले गर्ने अपराधमा एमालेले संरक्षण गर्न सबै शक्ति खर्च नगर्ला त ? यो कल्पना मात्रै होइन, वाइडबढी काण्ड, बालुवाटार काण्ड, सेक्युरिटी प्रेस काण्ड, ओम्नी तथा बादल समूहको घोटालादेखि अन्य अनेकौं काण्डमा एमाले शीर्ष नेतृत्वले संरक्षणमा आफ्नो शक्ति लगाएकै छ । अनुसन्धान र कारबाही कमजोर बनाइएकै छ । यो लेनदेनमा राजनीतिको गलत प्रयोग तथा व्यापारको दलालीकरणको डरलाग्दो गरी साँठगाँठ हुँदैन भन्ने कसले ग्यारेण्टी गर्ला ? यो पनि राजनीतिले नैतिकता गुमाउँदै क्षयीकरणको बाटो दह्रोसँग समाउँदै गरेको उदाहरण हो ।

राजनीतिक क्षेत्रले यस्तो पतनको बाटो अपनाएर देख्दा राज्यसंयन्त्र प्राजान्त्रिक, लोकतान्त्रिक तर व्यवहारमा तस्करी, भ्रष्टाचार, मानवताविरुद्धको अपराध गर्ने अवस्थालाई कसले कसरी रोक्ने ? यसको उत्तर पाउन कठिन छ । कठिन नै भए पनि कसैले न कसैले त पहल गर्नैपर्छ । यसका लागि यिनै दलभित्रका आधुनिक शिक्षा ग्रहण गरेका नैतिकवान् नेता, कार्यकर्ता नै अगाडि सर्नु आवश्यक छ । बौद्धिक तथा स्वतन्त्र नागरिक जगतले राजनीतिक क्षेत्रको दलाली तथा चाकरी गर्न छाड्नुपर्छ ।

## शंखधर.....

कछलाथ्व दशमीका दिन शंखधर दिवस मनाउने प्रचलन चलेको हो ।

मध्यपुर थिमि नगारपालिकाका नगरप्रमुख सुरेन्द्र श्रेष्ठ, उपप्रमुख विजय कृष्ण श्रेष्ठ तथा प्रमुख प्रशासकिय अधिकृत राम बहादुर के.सि र वडा अध्यक्षहरु सहितवाट माल्यार्पण तथा दिपप्रज्वलन गरिएको थियो ।

शंखधर साख्वाःलाई जनताको माग वमोजिम तात्कालिन प्रधानमन्त्री कृष्ण प्रसाद भट्टराई नेतृत्वको मन्त्री परिषदले मिति २०५६ साल मङ्सिर २ गते राष्ट्रिय विभुती घोषणा गरिएको थियो । त्यस्तै नेपाल सम्वतलाई राष्ट्रिय सम्वतको रुपमा २०६५ सालमा निवर्तमान प्रधानमन्त्री पुष्प कमल दाहाल प्रचण्डको नेतृत्वमा घोषणा गरि २०८० सालमा उनकै नेतृत्वमा सरकारी कामकाजी सम्वतका रुपमा प्रचलनमा ल्याएका थिए । नेपाल संवतलाई राज्य संयन्त्रबाट मान्यता दिइएपनि हालसम्म नेपालको आधिकारिक बुलेटिन गजेटमा प्रकाशन हुन सकेको छैन । नेपाल संवत केन्द्र सरकारका केही सरकारी निकाय र उपत्यकाका केही सरकारी निकायहरुको लेटरमा प्रयोग भइरहेको सन्दर्भमा सबै तिर प्रयोगमा ल्याउन अझै सशक्त दवावको आवश्यकता रहेको छ ।

## सहकारीमा.

तीनले के सोचेका छन् भने सहकारीलाई परिचालन गर्यो भने भोट बढ्छ । किनभने, मान्छे त्यहाँ बढी छन् । भोट र नोट दुवै भएको क्षेत्र भएको कारणले गर्दाखेरि राजनीतिक नेता र दलको पनि यो सहकारी क्षेत्रमा ध्यान गएको देखिन्छ ।

सहकारी क्षेत्रमा देखिएका समस्या समाधान गर्ने वा घटाउने भन्दा पनि थप्नेतर्फ राजनीतिक पार्टीहरूको भूमिका छ कि भन्ने अनुमान गर्न सकिन्छ ।

समस्याको जड साहुकारी

सहकारीको आफ्नै सिद्धान्त, मूल्य, मान्यता र अनुशासन छ । त्यसभित्र रहेर सञ्चालन भएका सहकारीहरूमा त्यस्तो किसिमको समस्या देखिएको छैन । जुन नामका मात्रै सहकारी छन्, त्यसलाई मैले पहिलेदेखि नै साहुकारी भन्ने गर्थें । त्यस्ता साहुकारीहरुले सहकारीको सिद्धान्त, मूल्य, मान्यता र अनुशासन केही पनि पालना गरेका छैनन् । तिनले सहकारीको नाम मात्रै राखेका छन् । तिनले व्यक्तिगत धन्दाजस्तो गरेका छन् । अहिलेको समस्या भनेको तिनै साहुकारीको समस्या हो ।

सबैलाई एउटा डालोमा हालेर हेर्नुहुँदैन । राम्रालाई राम्रो डालोमा हाल्ने र जसले नाममात्रै सहकारी गरेर साहुकारीको धन्दा गर्नेलाई व्यवस्थित गर्ने दिशातर्फ सरकार, सर्वसाधारण र सहकारीका सदस्यहरूको ध्यान जानुपर्छ । अहिलेकै अवस्थामा हाम्रो देशमा बचत तथा ऋणको कारोबार गर्ने सहकारी अगाडि बढ्न सक्छ जस्तो देखिँदैन ।

साहुकारीको समस्या कसरी आयो भने हाम्रो समाजमा विभिन्न किसिमका खेलाडीहरू हुन्छन् । ती खेलाडीहरूको ध्यान कस्तो हुन्छ भने कुन क्षेत्रमा लाग्यो भने धन आर्जन गर्न सजिलो गरी छोटो समयमा सकिन्छ भन्ने हुन्छ । विभिन्न नामका धन्दाहरू आउँछन् ।

फरार जीबी राई

युनिटी नेटवर्किङ र गोल्ड क्वेष्ट भनेर पनि हाम्रो देशमा आएको थियो । पहिला नेटवर्किङ व्यवसायमा आवद्ध मान्छेहरू अहिले सहकारीको आवरणमा देखिएका छन्। सहकारीको नामबाट आफ्नो व्यक्तिगत व्यवसाय सञ्चालन गर्दाखेरि यो समस्या आएको हो ।

जुन क्षेत्रमा त्यसको मूलभूत सिद्धान्त, मूल्य, मान्यता र अनुशासन पालना हुँदैन, स्वभाविकरूपमा समस्या आउँछ । यो नौलो विषय होइन ।

कसरी भित्रियो विकृति ?

सहकारी भनेको एउटा आदर्श क्षेत्र हो । आदर्श क्षेत्रमा आइसकेपछि त्यसको सिद्धान्त, मूल्य, मान्यता र अनुशासनमा रहेर काम गर्नुपर्छ । तर, हाम्रो सहकारी क्षेत्रमा यो विकृति विसंगति किन आयो भने सहकारी भन्नलाई मात्रै बनाएर आफ्नो व्यक्तिगत व्यवसाय वा पारिवारिक सहकारी बनाएर सधैँभरि एउटै मान्छेले हालीमुहाली गर्ने काम भयो ।

जनतालाई आकर्षण गर्न विज्ञापन गर्ने किसिमको अवस्था भयो । जसबाट सर्वसाधारणहरू आकर्षित भए, लोभिए । बचतकर्ताको बचत शेयर, घरजग्गामा लगानी भयो होला, दानदातव्यतिर पनि गयो होला । त्यसबाट विस्तारै बचतकर्ताहको रकम हिनामिना भयो । अहिले बचतकर्ताहरूले आफूले जम्मा गरेको पैसा खोई भनेर खोज्दा साँवा पनि छैन ब्याज पनि छैन भन्ने स्थिति बनेको छ । जसले गर्दा मान्छेहरूको अहिले बिल्लीबाठ भएको अवस्था छ ।

सरकारले पनि सो क्षेत्रमा छानबिनको विषय अगाडि बढाइरहेको अवस्था छ । सहकारी ऐन र सहकारी नियमावलीअनुसार सहकारी सञ्चालकलाई कारबाही गर्ने त्यति धेरै व्यवस्था छैन । त्यसको लागि ठगीको महलअनुसार कारबाही अगाडि बढ्छ ।

अहिले नेपाल प्रहरीले विभिन्न सहकारीका सञ्चालकहरूलाई नियन्त्रणमा लिएर कतिपय अनुसन्धानमा छन् भने कतिपय थुनामा राखेको अवस्था छ भने कतिपयको अदालतमा मुद्दा चलिराखेको अवस्था छ । यसरी भन्न सकिन्छ कि यो क्षेत्र एउटा समस्याकै क्षेत्रको रूपमा देखिएको छ ।

समाधानका उपायहरु

सरकारको तर्फबाट हेर्दा यो क्षेत्रमा देखिएका समस्या समाधान गर्ने विभिन्न विकल्पहरू हुन्छन् । अब बचत तथा ऋणको कारोबार गर्ने सहकारी संस्थाहरूलाई यहीरूपमा अगाडि बढ्न दिने की नदिने भन्ने विषयमा ठूलो प्रश्न खडा भएको छ । मलाई लाग्छ बचत तथा ऋणको कारोबार गर्ने सहकारी संस्थाहरूलाई यही हिसाबले अगाडि बढ्न दिनुहुँदैन ।

जुन सहकारी संस्थाहरू समुदायमा आधारित छन्, सबै एकआपसमा परिचित छन्, सबैको पेशा व्यवसाय एकै किसिमको छ भने अलग हिसाबले लिन सकिन्छ । खासगरी सहरी क्षेत्रमा स्थापना भएर बचत तथा ऋणको कारोबार गरेका सहकारी संस्थाहरूलाई हामीले पुनरावलोकन गर्नुपर्छ जस्तो लाग्छ ।

सहकारी सिद्धान्त अनुसार सञ्चालन भएको छ कि छैन ? सञ्चालन भएको छ भने तत्काललाई ठिकै होला । जसले सिद्धान्त पालना गरेको छैन र देखाउनकै लागि मात्रै सहकारी भन्ने र काम चाहिँ साहुकारी गर्ने त्यस्ताको हकमा सरकार कडाईपूर्व आउनुपर्छ ।

सहकारीको नाममा अरबौं रूपैयाँको कारोबार गर्ने सहकारी हाम्रो देशमा स्थापना होलान्, यस्ता पारिवारिक सहकारी खुल्लान्, यो सहकारी ऐन तर्जुमा गर्दाखेरि संसद् र नीति निर्माण गर्नेहरूले कल्पना गरेजस्तो लाग्दैन । त्यसैको कारणले गर्दाखेरी अहिले ठूलो समस्या आएको छ ।

सहकारी क्षेत्रमा देखिएका समस्या समाधानको लागि समस्याग्रस्त सहकारी व्यवस्थापन समिति भन्ने पनि छ । त्यसले पनि केही काम गरिरहेको होला । आशा गरौं, त्यो संस्थाले अझै राम्रो काम गर्ला ।

अहिलेको अवस्था हेर्दाखेरि सरकारले विभिन्न विकल्पहरू छनोट गर्नुपर्छ । मानौं कुनै एउटा सहकारी संस्थामा धेरै व्यक्तिहरूले बचत गरेका छन् । अब त्यो बचतको स्रोत पनि खोज्नुपर्ने हो कि ? कतिपय सहकारीमा भ्रष्टाचार र अन्य क्षेत्रको पैसा पनि जम्मा भएको छ भन्ने सुनिएको छ । त्यो एउटा विषय भयो ।

तर, सहकारीमा थोरैदेखि धेरैसम्म पैसा बचत गर्ने व्यक्तिहरू छन् । बचतमा दुईलाख, चारलाख, पाँचलाख, सरकारको बजेट क्षमता हेरेर मकै पोलेर गुजारा गर्नेको पैसा फिर्ता हुनसक्छ । भिख मागरे बचत गर्नेको पैसा फिर्ता हुन सक्छ । त्यस दिशातर्फ पनि जान सकिन्छ ।

सहकारी सञ्चालकहरूले आफ्नो पैसा लुकाएको अवस्था छ भने त्यो पनि कडाइका साथ लाग्नुपर्नेमा त्यसमा पनि कमजोरी भइरहेको हो कि जस्तो देखिएको छ । पैसा लुकाउनेले विदेशतिर पनि लिएर गएको हुनसक्छ भने कतिपले अचल सम्पत्तिको क्षेत्रमा पनि लगानी गरेका हुनसक्छन् । ती पैसा पनि खोज्न सकियो भने धेरै पैसा निकाल्न सकिन्छ ।

कतिपयले सहकारीमा बचत भएको रकमलाई शेयर, घरजग्गामा लगानी गरेका छन् भने त्यो क्षेत्रमा अहिले चलायमान भइराखेको छैन । त्यस्तो अवस्थामा व्यवस्थापन गर्नको लागि ग्रेस प्रियड भनेर दिएर सहजीकरण गर्ने वातावरण पनि सिर्जना गर्न सकिन्छ ।

सहकारीमा बचत हिनामिना गर्नेलाई कारबाही गर्नुपर्नेमा दुईमत हुँदैन तर, जेलभन्दा पनि मुख्य कुरा बचतकर्ताको बचत फिर्ता गर्ने हो । यसका लागि एउटा कुनै नामको कार्यदल बनाएर सहजीकरण गर्नसक्ने हो भने धेरैको बचत फिर्ता गर्न सक्ने सम्भावना पनि देखिन्छ । तर, सरकारका तर्फबाट यस्तो काम गर्दा बोल्ने एउटा र गर्ने अर्को भयो भने फेरि नतिजा प्राप्त गर्न सकिँदैन ।

यसलाई राजनीतिक एजेण्डाका रूपमा भन्दा पनि पीडितको पक्षमा सरकारले केही काम गर्नेपर्छ । संविधानले पनि त्यो भनेको छ । अल्पसंख्यक, गरिब, दलित लगायतको हित संरक्षण र त्यसको ग्यारेन्टी राज्यले गर्नुपर्छ भनेको अवस्था छ । त्यसो गर्दापनि राज्यलाई अन्यथा हुँदैन जस्तो लाग्छ ।

धेरै मानिसहरूको बचत हिनामिना भएर रुवावासी भएको दर्दनाक अवस्था अहिले देखिएको छ । सरकारले पनि चाहिने र नचाहिने सबै ठाउँमा खर्च गरिरहेको अवस्थामा मैले पहिले पनि भनेजस्तै एउटा तहको सीमा राखेर काम गर्ने हो भने तत्कालको लागि समस्या समाधान गर्न सकिन्छ ।

सहकारी क्षेत्रको समस्या सामान्य नभएर भयाभह नै छ । हाम्रो जस्तो अनुशासनमा खडेरी भएको समाजमा सहकारी जस्तो आदर्श सिद्धान्त, मूल्य, मान्यता र अनुशासनले चल्नुपर्ने सहकारी हाम्रो देशमा चल्छ कि चल्दैन भन्ने विषयमा एकपटक सोच्नुपर्ने हो कि भन्ने देखिएको छ । यस दिशातर्फ पनि सरकारको ध्यान जान जरूरी छ ।

अर्को महत्वपूर्ण विषय, अरबौं रूपैयाँको कारोबार गर्ने सहकारीहरूलाई हामीले यसैगरी छोड्यौं भने हाम्रो अर्थतन्त्र नै बिग्रन सक्ने सम्भावना रहन सक्छ । त्यसैले गर्दा एउटा स्तरको सिलिङ राख्ने काम गर्नुपर्छ । सो दिशामा पनि काम गर्न सकियो भने सहकारी क्षेत्रमा देखिएको समस्या समाधान गर्न सजिलो हुन्छ ।

दर्तामा कडाइ र जनचेतनाको कमी

सहकारी खोल्न एकदमै सजिलो छ । एनजीओ संस्था खोल्नको लागि प्रहरी रिपोर्ट चाहिन्छ । निजी कम्पनी खोल्न उसले आर्थिक अपराध गरेको छ कि छैन भनेर सोधीखोजी गर्ने काम गरिन्छ, तर, सहकारी खोल्नका लागि केही सोधीखोजी गरिँदैन । सजिलो गरी सहकारी खोल्न दिइन्छ । त्यसैले यो प्रक्रियामा पनि केही नियन्त्रण आवश्यकता भएको देखिएको छ ।

तर, सहकारीको अन्तर िष्ट्रिय मूल्य मान्यताअनुसार सहकारीमा नियन्त्रण गर्नुहुँदैन भनिन्छ । तर, हाम्रो देश, काल र परिस्थितिअनुसार त्यो पनि आवश्यक हो कि भन्ने देखिन्छ ।

त्यस्तै, अर्को महत्वपूर्ण विषय बैंक तथा वित्तीय संस्था खोल्नका लागि धरौटीको आवश्यकता पर्छ । तर, सहकारी खोल्नको लागि भने एक रूपैयाँ पनि धरौटीको आवश्यकता पर्दैन । यस्तो अवस्थामा चलखेल गर्न चाहने समाजका पात्रहरू यस दिशातर्फ आकर्षित भएको कारणले गर्दापनि अहिलेको समस्या सिर्जना भएको हो ।

अहिलेको सन्दर्भमा जनताले बैंक के हो, सहकारी के हो भन्नेपनि बुझ्न सकेन । कतिपयको बैंक हो भन्ने बुझाई छ भने कतिपयको सहकारी हो भन्ने बुझाई छ । कतिपयको त यसको ग्यारेन्टी सरकारले लिन्छ भन्ने बुझाइ पनि छ । सहकारी क्षेत्रमा फेरि पनि समस्या नआओस् भन्नका लागि जनतालाई पनि बुझाउन आवश्यक छ ।

सहकारी प्राधिकरण भन्ने नामचाहिँ ठूलो भयो । तर, यसले के काम गर्छ, त्यो विषय मैले बुझ्न पाएको छैन । प्राधिकरण नामका धेरै संस्था खुलेका पनि छन् । ती प्राधिकरणहरूले भनेजस्तो काम गरेको जस्तो पनि लाग्दैन । सहकारी क्षेत्रमा देखिएका समस्या जस्ताको त्यस्तै राखेर प्राधिकरण खोलेर तुरून्तै समस्या समाधान हुन्छ भन्ने लाग्दैन ।

सहकारी क्षेत्रमा स्थापनादेखि नै समस्या छन् । सञ्चालनमा समस्या छ । ती समस्या समाधान गर्ने दिशातर्फ अब जानुपर्छ । प्राधिकरण खोलेर वा कुनै नामको संस्था खोलेर केही साथीहरूले त्यसमा रोजगार पाउलान्, तिनीहरूको समस्या समाधान होला तर, सहकारी क्षेत्रको समस्या समाधान हुनसक्छ भन्ने विषयमा भने म स्पष्ट छैन ।

सहकारी विभागका पूर्वरजिष्ट्रार एवं नेपाल सरकारका पूर्वसचिव न्यौपानेसँग खबरहबले गरेको कुराकानीमा आधारित- खबरहब)

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# यस बर्षको अमेरिकन फिल्म मार्केटमा निशान

काठमाडौं । हरेक वर्ष विश्वभरका चलचित्र उद्यमीहरुका लागि 'अमेरिकन फिल्म मार्केट' विशेष आकर्षणको केन्द्र हुने गर्दछ । जसलाई विश्वको सबैभन्दा ठूलो चलचित्र व्यापार मेला मानिन्छ ।

यही नोभेम्बर ५ देखि १० सम्म अमेरिकन फिल्म मार्केट ४५ औं संस्करणका रूपमा अमेरिकाको लसभेगासको पाम क्यासिनो रिसोर्टमा आयोजना भएको थियो । लस भेगस अमेरिकाको प्रसिद्ध पर्यटकीय स्थल पनि हो ।

कार्यक्रममा ८० भन्दा धेरै देशका १०० भन्दा धेरै वक्ताहरुले फिल्मका आर्थिक पाटोदेखि लिएर, उत्पादन, वितरण, प्रविधि, एआई, फिल्म स्ट्रिमिङ, स्टोरी टेलिङ आदि विषयहरुमा मन्तव्य दिएका थिए । यो कार्यक्रममा सहभागीहरूले नयाँ फिल्महरू अवलोकन गर्न, किन्न, लगानीका लागि आफ्नो प्रोजेक्ट प्रस्तुत गर्न र नेटवर्किङ गर्ने अवसर पाउने गर्दछन् । विश्वभरबाट ६००० भन्दा धेरै सफल चलचित्र निर्माता, निर्देश, सिनेमाटोग्राफर, सम्पादक, चलचित्रकर्मी, वितरक, प्रदर्शकलगायत उच्च चलचित्र अधिकारीहरूको सहभागिता भएको यस मेलामा गत वर्ष एक अर्ब अमेरिकी डलरभन्दा बढिको निर्यात लाइसेन्स सम्झौतामा हस्ताक्षर भएको थियो र यस वर्ष अझ वृद्धि भएको अमेरिकन फिल्म मार्केटटका सिईओ जिन प्रिवेटले बताए ।

नेपाली चलचित्रकर्मीहरुको सहज पहुँचभन्दा धेरै पर रहेको यस मेलामा नेपाली चलिचत्र क्षेत्रका प्रतिनिधिहरुको फाट्टफुट्ट मात्र उपस्थिति हुने गदर्छ । यस वर्ष नेपालका सफल र प्रतिष्ठित चलचित्र तथा म्यूजिक भिडियो सम्पादक निशान घिमिरेले आफ्नो कम्पनी राड स्टुडियो र नेपाली चलचित्र क्षेत्रलाई प्रतिनिधित्व गर्दै सो मेलामा सहभागिता जनाएका थिए । घिमिरले यस बिचमा इटालियन आर्ट भिडियो, नभडा फिल्म, बृटिस भर्जिन आइल्याण्ड फिल्म कमिसन, अउल्ला फिल्म साउदी अरब, टोकियो फिल्म कमिसन जापान, वेस्ट भर्जिनियाँ इकोनोमिक डेभलपमेन्ट, पोलिस फिल्म, हलिउड फिल्मका मेकरहरू, बलिउड फिल्मका मेकरहरू, टर्किस फिल्म तथा चाइिनज फिल्मका मेकरहरू लगायत अरू थुप्रै फिल्ममेकरहरू भेटेका निशान सो भेटमा नेपाली फिल्मको कथाबस्तु, टेक्नोलोजी र छायांकनस्थलको बारमा कुरा भएको र चासो दिएको बताएका छन् ।

उनले अमेरिकी फिल्म माकेर्टमा संगालेको अनुभवलाई आगामी प्रोजेक्टहरुमा उतार्ने सोचमा रहेको पनि बताएका छन् । यो सहभाागिताले थप उर्जा दिएको बताउने निशान नेपाली चलचित्र क्षेत्रलाई विश्वका अन्य देशका चलचित्र उद्योगसँग सहकार्य गर्न र अनुभव साटासाट गर्न र नयाँ प्रविधिहरूसँग परिचित गराउन महत्वपूर्ण भूमिका खेल्नुका साथै विश्व चलचित्र उद्योगमा नेपाली चलचित्रको अन्तर्राष्ट्रिय रूपमै बजारिकरण गर्न समेत महत्वपूर्ण भूमिका प्रदान गर्ने उनले बताए ।

निशानले गत वर्ष पनि बेलायतको लन्डनमा भएको ' फोकस २०२३ मिट दी मेकर्स' सम्मेलनमा सहभागी भएर आफ्नो प्रस्तुति दिएका थिए । दुई दशकभन्दा बढी समय नेपाली चलचित्र तथा म्यूजिक भिडियो सम्पादन क्षेत्रमा काम गरेका निशान नेपाली म्यूजिक भिडियो तथा फिल्मका सर्वाधिक सफल सम्पादक हुन् । उनको सम्पादन सम्बन्धी अद्भुत कलाले फिल्म तथा भिडियोको स्तर नै उकास्नुका साथै व्यवसायमा पनि फाइदा भएको छ ।

निशानको सहकायले कतिपय निर्देशकलाई नेपाली चलचित्र उद्योगमा राम्रैसँग स्थापित हुन मद्दत पनि गरेको छ । उनको उच्च कोटीको सम्पादकीय क्षमता र सिर्जनशीलताले नेपाली कला र संस्कृतिको प्रवद्धर्नमा महत्वपूर्ण भूमिका खेलेको छ । उनका धेरै कामहरु नेपाली दशर्कहरु माझ लोकप्रिय छन् । रीाष्ट्रियस्तरका थुप्रै अवाडर्हरु उनको उच्च कोटीको सम्पादकीय क्षमता र सिर्जनशीलताले नेपाली कला र संस्कृतिको प्रवद्धर्नमा महत्वपूर्ण भूमिका खेलेको छ । उनका धेरै कामहरु नेपाली दशर्कहरु माझ लोकप्रिय छन् । रीाष्ट्रियस्तरका थुप्रै अवाडर्हरु जितेका निशान सम्पादक मात्र नभएर राम्रो निर्देशक पनि हुन् ।

# "कार्साङ"को जितु नेपाको क्यारेक्ट लुक्स सार्वजनिक

काठमाडौं । चलचित्र ' कार्साङ'को जितु नेपाको क्यारेक्ट लुक्स सार्वजनिक भएको छ । निर्माणपक्षले आज जितको क्यारेक्टर लुक्स सार्वजनिक गरेको हो ।

जितुले सिनेमाको छायांकनको बेला सेटमा अन्य कलाकारसँग खिचेर पोस्ट गरेको फोटोसँग उनको यो सिनेमाको क्यारेक्टर लुक्स मिल्दैन । क्यारेक्टर लुक्स हेर्दा जितुले 'कार्साङ'मा क्यारेक्टरका लागि मेहनत गरेको देखिन्छ ।

कालो टोपी, चेक सर्ट, स्टकोट, कालो पाइन्ट र लेकमा लगाउने गमबुट लगाएका जितुले झोला घुँडामा अड्याएका छन् । हातमा कचौरो बोकेका छन् । कचौरामा जाँड रहेको अनुमान लगाउन सकिन्छ । पृष्ठभूमिमा रहेका घर, पहाड, कुहिरो हेर्दा उनी कुनै लेकाली गाउँका स्थानीय हुन् भन्ने पुष्टि हुन्छ ।

पोस्टरमा 'मकै त पिन्ने घट्टामा पिरती बस्यो ठट्टामा' लेखिएको छ । त्यसैले उनी मकै पिस्न घट्टामा गएका हुन् कि भन्ने अनुमान लगाउन सकिन्छ । पोस्टरको यो स्टेटमेन्टले उनी कसैको प्रेममा परेका हुन् कि भन्ने अनुमान लगाउन सकिन्छ । तर, यसबारे निर्माणपक्षले केही प्रष्ट पारेको छैन ।

यसअघि दयाहाङ राईको क्यारेक्टर लुक्स सार्वजनिक गरेको ' कार्साङ'ले विस्तारै प्रचार सुरु गरेको छ ।

यम शेर्पाको डेव्यु लेखन तथा निर्देशनमा निर्माण भएको सिनेमा ' कार्साङ्' पुस २६ गते पदर्शन हुँदैछ ।

शेर्पा समुदायको संस्कृतिमा आधारित भएर बनेको चलचित्रमा अभिनेता दयाहाङ राई, डेब्यु अभिनेत्री सिर्जना निङलेखु, जितु नेपाल, दीया मास्के, बुद्धि तामाङ, सृष्टि गौतम, डोमा ह्योल्मो, प्रेम लोप्चन, सुरवीर पण्डितलगायतको अभिनय छ ।

यार्सा फिल्म्स र पुरुषोत्तम प्रधान फिल्म्सको प्रस्तुतिमा निर्माण भएको सिनेमाका पुरुषोत्तम प्रधानको छायांकार र निर्माता स्वयंम हुन् । सिनेमाको सह-निर्माताामा गोविन्द बोहरा, कार्यकारी निर्माता आङछिरिङ शेर्पा तथा लाइन प्रोड्युसर वीरेन्द्र शाही छन् । यो चलचित्रको अन्तराष्ट्रिय वितरक अधिकार हुल्या इभेन्टस सुमन पराजुली र सोमलाल थोकर लिएको छ भने देशभर वितरणको जिम्मेवारी आरआर फिल्म्स्ले लिएको छ ।

# ट्रम्पको जितमा हलिउड सेलेब्रिटी आक्रोशमा

काठमाडौं । डोनाल्ड ट्रम्पले राष्ट्रपतीय चुनाव जितेपछि हलिउड स्तब्ध बनेको छ । ए-लिस्टर हलिउड स्टारले डेमोक्र्याट उम्मेदवार कमला ह्यारिसलाई समर्थन गरिरहेका थिए । चुनावी नतिजा उल्टिएपछि अमेरिकी फिल्म र संगीतका सेलेब्रिटीले आक्रोश र निराशापूर्ण प्रतिक्रिया दिइरहेका छन् ।

इन्स्टाग्राम स्टोरीमार्फत हिपहप स्टार कार्डी बीले ट्रम्पको जितमा प्रतिक्रिया दिंदै लेखेकी छन्, 'म तिमीलाई नराम्रोसँग घृणा गर्छु ।' त्यसपछिको अर्को पोस्टमा उनले आफूलाई हैरान नपार्न ट्रम्प समर्थकलाई आग्रह गरेकी छन् । चुनावको केही दिनअघि आयोजित ह्यारिसको र्‍यालीमा कार्डी सहभागी थिइन् ।

ह्यारिसलाई 'इन्डोर्स' गरेकी पपस्टार बिली एलिसले पनि ट्रम्पको जितमा प्रतिक्रिया जनाएकी छन् । ' यो महिलाविरुद्धको युद्ध हो' कालो पृष्ठभूमिको सेतो अक्षरमा उनले लेखेकी छन् ।

एलिसले न्यासभिल, टेनेसीमा कन्सर्टको क्रममा पनि यसबारे प्रतिक्रिया दिइन् । 'योर पावर' गीत गाउनुअघि उनले भनिन्, ' महिलाहरूलाई यति गहिरो घृणा गर्ने कोही राष्ट्रपति हुन लागेको छ । यो गीत सबै महिलाका लागि हो । म तिमीलाई माया गर्छु, म तिमीलाई समर्थन गर्छु ।'

पपस्टार एरियाना ग्रान्डे, जो हाल विक्ड नामक एल्बमको प्रचारमा व्यस्त छिन्, उनले ह्यारिसलाई खुलेरै इन्डोर्स गरेकी थिइन् । उनले चुनावी नतिजाबारे धारणा राखेकी छन् । ' आज यो नतिजाको असीम भारीपन महसुस गर्ने हरेक व्यक्तिको हात समात्दै' उनले कालो पृष्ठभूमिमा सेतो अक्षरमा पोस्ट गरेकी छन् ।

पपस्टार सविना कार्पेन्टरले पनि कन्सर्टको क्रममा चुनावी नतिजाबारे क्षोभपूर्ण प्रतिक्रिया दिएकी छन् । 'मलाई हाम्रो देश र यहाँका सबै महिलाप्रति धेरै दुःख लाग्छ, म तिमीलाई धेरै माया गर्छु । म साँच्चै आशा गर्छु कि बाँकी रात तपाईं आफैंले रमाइलो गर्न सक्नुहुन्छ किनभने तपाईं यसको योग्य हुनुहुन्छ' भीडलाई सम्बोधन गर्दै उनले भनिन् ।

सुपरमोडल हेली बिबर, ज्याक एन्टोनोफ, फिनीस, जिम्मी किमेल, स्टिफन कोलबर्ट, सेठ मेयर्स, लिली रेनहार्ट, मुनरो बर्गडोर्फले पनि ट्रम्पको जितमा हैरानी व्यक्त गरेका छन् ।

'जनरल हस्पिटल' स्टार न्यान्सी ली गाहनले आफ्नो छोरीको सुरक्षाका लागि सामाजिक सञ्जालको खाता डिलिट गर्ने बताएकी छन् । 'मलाई धेरै खेद छ । भगवान हाम्रो रक्षा गर्नुस्' उनी लेख्छिन् ।

डेमोक्र्याटलाई ट्रम्पले 'हलिउड क्लब' बताउने गर्थे । ह्यारिसको पक्षमा वियोन्से, टेलर स्विफ्ट, लेडी गागा, लियोनार्दो डिक्याप्रियो लगायतका सेलिब्रेटीले समर्थन जनाएका थिए । तर निकै कम मात्र कम चर्चित सेलिब्रेटी ट्रम्पको पक्षमा देखिए ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क १६ ने.सं. ११४५ कछलागा पञ्चमी मंसीर ०५ गते बुधबार, २०८१ 20 Nov. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

# भक्तपुरमा २५ वर्षपछि “भक्तपुर महोत्सव” को आयोजना हुँदै



भक्तपुर । देश कै सानो जिल्लाको रुपमा रहेको र त्यसमाथि मल्लकालीन पचपन्न झ्याल भएको दरबार, पाँच छाना (ङ्यातापोल)को मन्दिर, सिद्धपोखरी भाज्यपुखूलगायतका पोखरीहरु र दरबार क्षेत्र । साथै हालसम्म पनि मल्लकालिन बस्ती र जनजीवनको झल्को दिने साँस्कृतिक र मौलिक परम्पराहरुको संगम स्थलको रुपमा रहेको भक्तपुर यतिमा मात्र सीमित छैन । कला, संस्कृति र सभ्यताले जीवन्त सहरकॊ रुपमा रहेको यो नगर स्वयं भक्तपुरवासीलाई समेत नौलो लाग्छ । हरेक पन्ध्र दिन र महिना दिनमा आउने यहाँको सांस्कृतिक पर्व, दाफाभजन, परम्परागत नाचगान र परम्परागत सीप-मृत्तिकाकला, वास्तुकला, हस्तकला आदिका कारण भक्तपुरलाई ‘जीवन्त कला-संस्कृति’सहितको महोत्सवै महोत्सवको सहरका रूपमा चिनिन्छ ।

यही भक्तपुरमा आउने मंसिर २८ गतेदेखि पुस २ गतेसम्म पाँच दिने बृहत् भक्तपुर महोत्सव आयोजना हुने भएको छ ।

भक्तपुरको कला, संस्कृति, जीवनशैली र स्थानीय उत्पादनलाई प्रवर्धन गर्दै आन्तरिक तथा बाह्य पर्यटकलाई आकर्षित गर्ने मुख्य उद्देश्यका साथ मंसिर २८ गतेदेखि भक्तपुर महोत्सव आयोजना गरिन लागेको भक्तपुर नगरपालिकाले जनाएको छ । पाँच दिनसम्म चल्ने यो महोत्सवमा सिङ्गो भक्तपुरलाई नियाल्ने नौलो अवसर मिल्ने छ ।

नगरप्रमुख एवं महोत्सव मूल समारोह समितिका संयोजक सुनिल प्रजापतिले पर्यटन उद्योगमार्फत नगरको आर्थिक गतिविधि वृद्धि गर्दै नगर र नगरवासीको आर्थिक विकासमा योगदान दिने महोत्सवको उद्देश्य रहेको जानकारी दिए । ‘भक्तपुर आफैंमा कला र संस्कृतिले धनी सहर हो,’ उनले भने, ‘पछिल्लो समय यो ज्ञान विज्ञानले पनि भरिपूर्ण हुँदै छ ।’ भक्तपुरको विकासमा नगरपालिका निरन्तर लागिरहेको बताउँदै उनले अब देखाउने बेला पनि आएको बताए । ‘यो महोत्सव हामीले गरेका कामहरू देखाउने अवसर पनि हो,’ उनले भने, ‘यसबाट आएका सुझावका आधारमा हामी थप अगाडि बढ्ने छौं ।’ यहाँका किसानका भकारीमा अन्न मात्र होइन, अब ज्ञान पनि भण्डारन हुँदै गएको उनी सुनाउँछन् ।

महोत्सवको मुख्य लक्ष्य भक्तपुरको कला, संस्कृति, सम्पदा र मौलिक उत्पादनहरूको प्रवर्धन गरेर स्वदेशी र विदेशी पाहुनालाई आकर्षित गर्न सकियोस् भन्ने रहेको उनका जस्तै भनाइ राख्छिन् नगरकी उपप्रमुख रजनी जोशी पनि । उपप्रमुख रजनी जोशीले भक्तपुर महोत्सवलाई नगरका गतिविधि प्रदर्शन गर्ने अवसरका रूपमा सञ्चालन गरिने बताइन् । भक्तपुर नगरपालिकाले पुर्खाले सिर्जेका अमूल्य सम्पदाहरूको संरक्षण, प्रवर्धन र सदुपयोग गर्दै भक्तपुरमा पर्यटन उद्योगको आधार तयार पारेको जनाएको छ । भक्तपुर महोत्सव सचिवालयका संयोजक गौतमप्रसाद लासिवाले महोत्सव तयारीका लागि हालसम्म भएको तयारी एवं गतिविधिहरूबारे संक्षेपमा प्रस्तुतीकरण दिँदै भव्य आयोजना हुने बताए । महोत्सवमा ३२ वटा विधा ८० स्थानमा सञ्चालन हुनेछन् । महोत्सवकै अवसर पारेर भक्तपुर नगरपालिकाले स्मारिका र

बाँकी पेज ७ मा

## दलको अनौठो तालमेल : कांग्रेसको चुनाव चिन्हमा एमालेको उम्मेदवार



काठमाडौं । आसन्न स्थानीय तहको उपनिर्वाचनमा सत्तारुढ २ ठूला दल नेपाली कांग्रेस र नेकपा एमालेले अनौठो चुनावी तालमेल गरेका छन् । सशस्त्र संघर्षको समयदेखि नै प्रमुख प्रतिपक्षी नेकपा माओवादी केन्द्रको गढका रुपमा परिचित रहेको पूर्वी रुकुमको पुथा उत्तरगंगा गाउँपालिकामा कांग्रेस र एमालेले अनौठो चुनावी तालमेल गरेर सबैको ध्यान तानेको छ ।

मंसिर १६ गते पुथा उत्तरगंगा गाउँपालिकामा हुन लागेको पालिका उपाध्यक्षको लागि हुन लागेको निर्वाचनमा कांग्रेस-एमालेले चुनाव चिह्न र उम्मेदवार एक आपसमा साटेका छन् । पुथा उत्तरगंगामा कांग्रेस र एमालेले माओवादीको गढ भत्काउने योजनासहित यो तालमेल गरेको आकंलन

बाँकी पेज ७ मा

## मध्यपुर थिमिमा सरसफाई अभियान शुरु

भक्तपुर । मध्यपुर थिमि नगरपालिकाले गठन गरेको युवा क्लव सञ्जालले शनिवारबाट साप्ताहिक रुपमा मठमन्दिर सफाई गर्ने अभियान शुरु गरेको छ । नगरपालिकाले यही पौष १२, १३ र १४ गते आयोजना गर्ने मध्यपुर महोत्सवलाई लक्षित गरी युवा सञ्जाललाई सरसफाई अभियानमा परिचालन गरेको जनाएको छ ।

अभियान बालकुमारी मन्दिर परिसरबाट शुरुवात गर्दै नगर प्रमुख सुरेन्द्र श्रेष्ठले युवाहरुलाई सामाजिक कार्यमा उत्प्रेरित गर्ने उद्देश्यले अभियानको शुरुवात गरेको जानकारी दिए । उनले युवाहरु आधुनिकताको नाममा ईन्टरनेट र मनोरञ्जनमा मात्र



सिमित हुँदा सामाजिक कार्य ओझेलमा पर्न थालेको बताउँदैं नगरपालिकाले युवाहरुलाई विभिन्न गतिविधिमा संलग्न गराउने उद्देश्यले नगरपालिकाले कार्य गरिरहेको जानकारी दिए ।

बाँकी पेज ७ मा



## नेतृत्व सचेत नभए अब सिस्टमबाहिरबाट नेतृत्व आउँछ !

**जैनेन्द्र जीवन**

हुन त अहिले हामीसँग संविधान छ, सरकार छ । हामी राजनीतिक स्थिरताका कुरा पनि गरिराखेका छौं । सबै हिसाबबाट सतहमा हेर्दाखेरि सबै ठिकठाक छ । तर नागरिकको हिसाबबाट हेर्दा एकदमै चरम निराशा छ । एकदमै शून्यता छ, कुनै पनि हिसाबबाट भरोसायोग्य भएन, मेरो भाग्य पनि भएन, मेरो भविष्य पनि भएन भन्ने मात्रै भाष्य स्थापित भएको छ । यसमा मेरो तीन वटा किसिमका उत्तर छन् ।

एउटा संविधान संरचनाको कुरा छ । त्यसमा पनि यो सर्वसम्मत आएको होइन । हेर्नुस् यो एउटा सम्झौता, त्यति बेला संविधानसभा पूर्ण बहुमतबाट पास भए पनि कतिपय जस्तो संघीयतालगायतका विवादास्पद मुद्दाहरू जनमत विपरीत एउटा छ । आम जनताबाट सुझाव एउटा आएको छ । त्यस विपरीत थोपरिएको र त्यसको वकालत गर्ने पार्टीहरूले हाम्रो उपलब्धि नै त्यही हो भन्न थालेका छन् । जबकि जनताले त्यसलाई उपलब्धि मान्दैनन् , बरु विवादको चुरो ठान्छन् ।

अर्को, संविधान संरचनाले दुई-दुईचोटि संविधानसभा बनायो, त्यो ठिक छ । एउटा परिवर्तन ल्याउनु थियो मुलुकमा । अहिलेलाई लोकतन्त्र सुरक्षित छ भन्ने भयो । अर्को, संरचनाले मात्रै पनि हुँदैन, के संरचना चलाउने ? ड्राइभर कस्तो हुन्छ ? गाडी त एकदम राम्रो हामीले ल्याउँला तर त्यो चलाउने मान्छे कस्तो छ ? त्यसमा भर पर्छ ।

राजनीतिक सीटमा बसेकाहरू कोही गतिला भएनन् । र हरेक सङ्गठनमा लिडरसीप क्राइसिस भयो । त्यसको फाइदा उठाउन केही मान्छेहरू विकल्प हामी हौं भनेर आए । हुँदाहुँदै अहिले राजनीतिमा नलागे पनि भोलि राजनीतिमा आशिका तामाङ जस्तो सडकबाटै हरेक कुराको समाधान चाहन्छन् । लोकप्रियतावादमा विश्वास गर्छन् ।

कानून नियमसँग मतलब छैन । मानिसको निराशा र दुखलाई भजाएर यस्ता किसिमका मान्छेहरू आएका छन् । यसले गर्दा अब राजनीतिमा ठूलो सुधारको आवश्यकता देखिराखेको छ । प्रणालीमा पनि देखिएको सुधार गर्नुपर्छ । अहिले संविधान संशोधन गर्नुपर्छ भन्ने कुरा पनि आएको छ । दुई प्रमुख दलहरूले सरकार बनाउँदा पनि संविधान संशोधन गर्नुपर्छ भनेका छन् । यो खाली एउटा देखावटी भन्नको लागि मात्र हैन । गठबन्धनको औचित्य साबित गर्न मात्र हैन । वास्तवमै त्यो गर्नुपर्ने भएको छ । तर उहाँहरू त्यसमा कत्तिको इमानदार हुनुहुन्छ ?

बाँकी पेज ७ मा



# एभरेष्ट कलरले पारित गर्यो आइपिओ निस्कासन प्रस्ताव




काठमाडौं । रंग उत्पादन गर्ने कम्पनी एभरेष्ट कलर लिमिडेटको पहिलो साधारणसभाले सर्वसाधारणलाई चुक्ता पूँजीको १५ प्रतिशत साधारण सेयर निस्कासन गर्ने प्रस्ताव पारित गरेको छ । कम्पनीको शनिबार सम्पन्न साधारणसभाले संस्थापक सेयरधनीका तर्फबाट संचालक समितिमा प्रतिनिधित्व गर्ने ५ जना संचालकको पनि चयन गरेको छ ।

अन्य कलर उधोग भन्दा पृथक ढँगले, स्वदेशी युवाहरुको लगानीमा गुणस्तरीय एभरेष्ट कलर उपभोग गरेर आयात प्रतिस्थापन गर्ने, रोजगारीको श्रृजना गर्ने र आन्तरिक राजस्वमा योगदान पुऱ्याउने उद्देश्य लिएर १४ बर्षअघि एभरेष्ट कलर कम्पनी स्थापना भएको हो । कम्पनीको अधिकृत पुँजी ३० करोड रुपैयाँ र जारी पुँजी २६ करोड रुपैयाँ छ । त्यसमध्ये संस्थापक सेयरधनीले २२ करोड १० लाख रुपैयाँ चुक्ता गरिसकेका छन् । सर्वसाधारणलाई १५ प्रतिशत सेयर निस्कासन गरेपछि कम्पनीको चुक्ता पुँजी २६ करोड रुपैयाँ पुग्ने छ ।

साधारणसभाले सरोज लुईटेल, राजनलाल श्रेष्ठ, महेश्वर खनाल, रोजीना श्रेष्ठ र आत्माराम ढुँगानालाई संस्थापक सेयरधनीका तर्फबाट संचालकमा निर्बाचित गरेको छ । कम्पनीमा सर्वसाधारण सेयरधनीका तर्फबाट एक जना र अर्का एक स्वतन्त्र संचालक समेत ७ जनाको संचालक समिति रहने ब्यवस्था छ । निर्वाचित संचालकहरुलाई निर्वाचन अधिकृत अधिवक्ता लीलानाथ घिमिरेले प्रमाणपत्र हस्तान्तरण गर्नु भएको थियो ।

एभरेष्ट कलर ५ महिनाअघि प्राइभेट लिमिटेड कम्पनीबाट पब्लिक लिमिटेडमा रुपान्तरण भएको थियो । कम्पनीले १४ वर्षदेखि बहुराष्ट्रिय कम्पनी सरह उच्च गुणस्तरीय कलरहरु उपलब्ध गराउने नेपाली कम्पनीको रुपमा परिचित रहँदै आएको छ । स्वदेशी युवाहरु सँगठीत भई सहकारी मोडलमा एभरेष्ट कलर सुरु गरेका थिए । कम्पनीले नेपाली हावापानी सुहाउदो उच्च गुणस्तरका प्रिमियमदेखि ईकोनोमी ब्राण्डका विभिन्न प्रकारका रंगहरु उपलब्ध गराइरहेको छ । कम्पनीले वाहिरी सतहको लागी १० वर्ष वारेन्टी भएको ब्रिलिएन्ट ड्याम्प प्रुफ, ७ वर्ष वारेन्टी भएको एभरगार्ड प्रिमियम इमल्सन, एभरसाइन एक्स्टेरियर इमल्सन र र एभरकोट एक्स्टेरियर इमल्सन, भित्री सतहको लागी सफिर लग्जरी इन्टेरियर, डाइसी प्रिमियम इन्टेरियर, बेल इन्टेरियर, फुच्चे बेल इन्टेरियर, एलियन इन्टेरियर इमल्सन, रोयल एक्रेलिक वासेबल डिस्टेम्पर, बेल एक्रेलिक डिस्टेम्पर, प्राईमर तर्फ प्रिमियम एक्टेरियर, इन्टेरियर प्राइमर, काठ तथा धातुमा प्रयोग हुने एभरल्याक हाइक्लास इनामेल, जुरेली सिन्थेटिक इनामेल, गैंडा बजेट एसवाइएन, इनामेल तथा त्यसमा प्रयोग हुने उड प्राइमर, मेटल प्राइमर रेड अस्साइड, लगायतका आल्मुनियम पेन्टस्, वाटर प्रुफिङ, गोल्ड पेन्ट, फ्लोर अक्साइड पाउडर, आर्ट कार्यमा प्रयोग हुने एभरेष्ट च्वाइसलगायत औधोगिक प्रयोजनको लागी प्रयोग हुने विभिन्न कलरहरु उत्पादन गर्दै आईरहेको छ । निकट भविष्यमा १२ वर्ष वारेन्टी भएको सुपर प्रिमियम एक्स्टेरियर इमल्सन बजारमा ल्याउने तयारी भईरहेको कम्पनीले जनाएको छ ।

अन्तराष्ट्रिय गुणस्तर ब्यवस्थापन प्रमाणिकरण प्रमाण पत्र आइएसओ ९०००१:२०१५ प्राप्त गरिसकेको एभरेष्ट कलरले कुशल ब्यवस्थापनको साथै उत्पादनहरूको गुणस्तर, वातावरण प्रभाव प्रतिको दायित्व, कार्यस्थलमा स्वास्थ्य र सुरक्षा आदिलाई मनन गरी अन्तराष्ट्रिय स्तरको प्रविधि तथा अत्याधुनिक मेसिनबाट उत्पादन तथा ल्याव टेस्ट गरी नेपाली बजारमा रंगहरु वितरण गरिरहेको छ ।

# सूर्यदर्शन साकोसको १४ औं साधारण सभा सम्पन्न




मध्यपुर थिमि । थिमिको शंखधरचोक स्थित राष्ट्रिय विभूति शंखधर साख्वाःको प्रतिमा स्थल परिसरमा रहेको सूर्यदर्शन बचत तथा ऋण सहकारी संस्था लिमिटेडको १४ औं वार्षिक साधारणसभाबाट गत मंसीर १ गते शनीबार थिमि बैंक्वेटमा सम्पन्न भएको छ । कार्यक्रम मध्यपुर थिमि नगरपालिकाको सहकारी शाखा प्रमुख अभयन्द्र रन्जितको प्रमुख आतिथ्यतामा भएको कार्यक्रममा संस्थाका अध्यक्ष तथा सभाका सभापति चन्द्रकृष्ण श्रेष्ठले वार्षिक कार्ययोजना प्रस्तुत गरेको थियो ।

त्यस्तै कार्यक्रममा संस्थाका कोषाध्यक्ष दिनेश श्रेष्ठले आर्थिक प्रतिवेदन तथा लेखा समितिका संयोजक सूर्जमान श्रेष्ठबाट लेखा सुपरिवक्षण प्रतिवेदन प्रस्तुत गरिएको थियो । त्यस्तै कार्यक्रममा सदस्यका छोराछोरी मध्येबाट एसईईमा उत्कृष्ट नतिजा ल्याउन सफल छात्रा दिलाशा श्रेष्ठ र छात्र गौरभ श्रेष्ठलाई सूर्यदर्शन मेधावी अवार्डबाट सम्मानित गरिएको थियो ।

साथै संस्थाले गत आर्थिक वर्षमा १३९८ सदस्यहरुबाट कुल पूँजी रु. २१,३२९,००० पुगेको र संस्थाले गत आर्थिक वर्षमा १ लाख त्रियोत्तर हजार सात सय अठार खुद नाफा गरेको संस्थाका व्यवस्थापक जीवन श्रेष्ठले जानकारी दिए ।

कार्यक्रममा मित्र सहकारीका प्रतिनिधिहरुको समेत सहभागिता रहेको थियो भने सहजीकरण संस्थाका सहसचिव सुनिल श्रेष्ठले गरेको कार्यक्रम थिमि बैंक्वेटको सभाहलमा सम्पन्न भएको थियो ।

# ओस्ला सहकारीको अध्यक्षमा पुन:रोशन बज्राचार्य




मध्यपुर थिमि । थिमिको दथुटोलमा रहेको ओस्ला बचत तथा ऋण सहकारी संस्था लिमिटेडको १४ औं वार्षिक साधारणसभाबाट आगामी ४ वर्षका लागि अध्यक्षमा पुन: रोशन बज्राचार्य निर्वाचित भएको निर्वाचन प्रमुख भरत श्रेष्ठले जानकारी दिए । त्यसैगरी उपाध्यक्षमा दिकेश बज्राचार्य, सचिवमा नन्दु श्रेष्ठ र कोषाध्यक्षमा सुशील जोशी सर्वसम्मत निर्वाचित भएको छ । त्यसैगरी सदस्यहरुमा तुल्सीराम श्रेष्ठ, शम्भुजय श्रेष्ठ र प्रकाश शाक्य चयन भएको छ । त्यसैगरी लेखा सुपरिवेक्षण समितिमा ओम कृष्ण श्रेष्ठको संयोजकत्वमा सदस्यद्धय दिवेश श्रेष्ठ र सुधा श्रेष्ठ चयन भएको छ ।

गत शनीवार अध्यक्ष रोशनकाजी बज्राचार्यको सभापतित्वमा भएको १४ औं वार्षिक साधारण सभा सम्पन्न भएको थियो । कार्यक्रम बाद्य एवं नृत्य गुरु श्रीगोपाल प्रजापतिको प्रमुख आथित्यमा भएको थियो । कार्यक्रममा अध्यक्ष बज्राचार्यले संस्थाको वीर्षक प्रतिवेदन प्रस्तुत गर्दै शेयर सदस्यहरुको आर्थिक उन्नति, सामाजिक विकास, सांस्कृतिक उत्थानदेखि स्वास्थ्य शिक्षा एवं सीपविकासका कार्यक्रमलाई प्राथमिकता दिएको बताए । १९ सय ३३ जना शेयर सदस्य र ३ करोड शेयर पुँजी रहेको संस्थाको भावी नीति तथा कार्ययोजना बुदाँगतरुपमा प्रस्तुत गरेको कार्यक्रममा संस्थाका सचिव दिकेश बज्राचार्यले संस्थाको वार्षिक प्रगति प्रतिवेदन र कोषाध्यक्ष सुशील जोशीले आर्थिक प्रतिवेदन पेश गरेको थियो । संस्थाका उपाध्यक्ष नन्दु श्रेष्ठले स्वागत र सञ्चालक सदस्य शम्भुजय श्रेष्ठले धन्यवाद मन्तव्य व्यक्त गरेको कार्यक्रममा लेखा संयोजक प्रकाश शाक्यले लेखा सुपरीवेक्षण समितिको प्रतिवदेन प्रस्तुत गरेको थियो । कार्यक्रममा मध्यपुर थिमि नगरपालिकाका सहकारी शाखा प्रमुख अभयन्द्र रञ्जित, ओस्ला नेपालका अध्यक्ष राजेश श्रेष्ठलगायतका वक्ताहरुले शुभकामना मन्तव्य व्यक्त गरेको थियो । कार्यक्रम शंखधर बैंक्वेटमा भएको थियो ।

# प्रवासी नेपाली मञ्च क्यानडाको अध्यक्षमा रमेश धिताल चयन




शिशिर सिंखडा, टोरण्टो । प्रवासी नेपाली मञ्च क्यानडाको अध्यक्षमा रमेश धिताल सहितको कार्यसमिति सर्वसम्मत चयन भएका छन । समितिको उपाध्यक्षमा मदन अधिकारी, सचिबमा सन्दीप पौडेल, उपसचिबमा कृष्ण पराजुली र बिमला कार्की चयन हुनु भएको छ । शनिबार भएको प्रवासी नेपाली मञ्च क्यानडाको चौथो अधिवेशनले सम्पुर्ण कार्यसमिति सर्वसम्मत चयन गरिएको निर्वाचन मण्डलका सचिब रबिन्द्रराज घिमिरेले जानकारी दिनुभयो ।

२५ सदस्यीय कार्य समितिको सदस्यहरुमा लोक गुरुङ, केपी पन्त, सुदर्शन अधिकारी, सुजन खतिवडा, राजन पाईजा, दुर्गा केसी, अरबिन पौडेल, राजु भट्टराई, रिंकु भट्टराई, प्रकाश ढकाल, दिनेश विष्ट, महेश विष्ट, सुदर्शन सापकोटा, सुरेश भट्टराई, हिमाल अर्याल, तारा लामिछाने, उद्धिम न्यौपाने लगायत चयन हुनु भएको छ ।

उदघाटन कार्यक्रममा प्रमुख अतिथि प्रवासी नेपाली मञ्च अन्तर्राष्ट्रिय कमिटीका सचिवालय सदस्य तथा अमेरिका रिजन ईन्चार्ज प्रभुराम थापा, विशेष अतिथि प्रवासी नेपाली मञ्च अन्तर्राष्ट्रिय कमिटी सदस्य तथा महिला बिभाग सदस्य कुन्ती थापा, बिभाग उपप्रमुख जानकी कार्कीले शुभकामना मन्तव्य व्यक्त गर्नु भएको थियो ।

सो उद्धघाटन कार्यक्रममा एनआरएनए आईसीसीका सह कोषाध्यक्ष अभिमन्यु बस्नेत, प्रवासी नेपाली मञ्च क्यानडाका सल्लाहकार संयोजक तथा पुर्व अध्यक्ष रमेश थापा, एनआरएनए आईसीसी सदस्य हेमराज पाण्डे, जीपी फाउन्डेसनका अध्यक्ष केपी निरौला, एनबीडीएका अध्यक्ष सुरेश गौतम, समाजसेवी सीता संग्रौला, एनआरएनए क्यानडाका उपाध्यक्ष किरोज श्रेष्ठ, महासचिव चन्दा अधिकारी, एनसीएनसीका अध्यक्ष दिनेश खतिवडा, एनसीसीएसका चेयर पर्सन डा. थमनाथ अधिकारी, नेपाल हाउसका अध्यक्ष भुमीराज घिमिरे, पीएनसीसीका चेयर पर्सन केदार बस्नेत, एनसीएचसीका अध्यक्ष लिला भण्डारी, टीएनएससीका अध्यक्ष रबिन्द्र लम्साल, एनपीआरसीका अध्यक्ष नेत्र भट्टराई, व्यावसायी डा.पुर्ण कंडेल, चितवन सोसाइटीका हरी भुसाल, एनआरएनए क्यानडाका पुर्व अध्यक्ष तथा रेडियो संचालक अनिल थापा, नेपाली जनसम्पर्क समितिका सुरेश रजौरे, लाली गुराँस स्पोर्ट्स क्लबका अध्यक्ष क्रीजल केसी लगायतले आफ्ना भनाई राख्नुभएको थियो ।

अधिवेशनमा भौगोलिक विविधताका कारण भौतिक रुपमा उपस्थिति हुन नसकेका सदस्यहरुलाई जुम मार्फत उपस्थितिको व्यवस्था गरिएको थियो । जसमा ब्रिटिश कोलम्बियाबाट प्रवासी नेपाली मञ्च अन्तर्राष्ट्रिय समिति नेपाली लगानी प्रवर्द्धन विभाग सदस्य तथा एनआरएनए आईसिसि सदस्य भुवन खरेल, राजु भट्टराई, अल्वर्टाबाट सन्दिप पौडेल, अरबिन पोखरेल, रिंकु वाग्ले लगायतको उपस्थिति रहेको थियो । प्रवासी नेपाली मञ्च क्यानडाका अध्यक्ष बिश्वम्भर घिमिरेको अध्यक्षतामा भएको कार्यक्रममा उपाध्यक्ष बेदनिधि गौतमले स्वागत मन्तब्य व्यक्त गर्नुभएको थियो ।

# बागलुङमा डिष्ट्रिक्ट ३२५ जे नेपालको दोस्रो क्याबिनेट बैठक सम्पन्न


© saurav kc

बागलुङ। लायन्स इन्टरनेसनल मल्टिपल डिष्ट्रिक्ट ३२५ जे नेपालको दोस्रो क्याबिनेट बैठक बागलुङमा सम्पन्न भएको छ।

नेपाल उद्योग वाणिज्य महासंघका अध्यक्ष चन्द्र प्रसाद ढकालको प्रमुख आतिथ्यतामा सम्पन्न कार्यक्रममा डिष्ट्रिक्टका विभिन्न पदमा सक्रिय लायन लिडरहरुलाई सम्मान तथा अवार्ड प्रदान गरिएको थियो।

कार्यक्रममा बोल्दै प्रमुख अतिथि ढकालले लायन्स क्लबले गरेको सेवाका बारेमा जति प्रशसा गरे पनि नपुग्ने बताए। उनले लायन्स क्लबले गर्ने सामाजिक कार्यहरुमा उद्योग वाणिज्य महासंघ सहकार्य गर्न तयार रहेको बताए।

डिष्ट्रिक्ट ३२५ जे नेपालका डिष्ट्रिक्ट गभर्नर लायन मिलन थापाले अगष्ट, सेप्टेम्बर र अक्टोबर महिनामा उत्कृष्ट हुन सफल लायन लिडरहरुलाई पिन, मेडल तथा सर्टिफिकेट प्रदान गरी सम्मान गरिन्। यसबाहेक कार्यक्रम सफल बनाउन सहयोग गर्ने अन्य लायन लिडरहरुलाई पनि डिष्ट्रिक्ट गभर्नर थापाले सम्मान गरिन्।

धौलागिरी एरियाका सबै क्लबहरुको संयुक्त आयोजनामा भएको दोस्रो क्याबिनेट बैठक कार्यक्रममा मल्टिपल डिष्ट्रिक्ट हंगर कोअर्डिनेटर लायन योगेन्द्र प्रधान, फस्ट पर्सन तथा मल्टिपल डिष्ट्रिक्ट कन्भेन्सन चियरपर्सन लायन ध्रुब बहादुर थापा, आईपिडीजी लायन हरिप्रसाद मरहट्टा, फस्ट भाईस डिष्ट्रिक्ट गभर्नर लायन मिलन बाबु मल्ल, सेकेन्ड भाईस डिष्ट्रिक्ट गभर्नर लायन प्रजापती बाँस्तोला, चिफ एडभाईजर लायन कुश प्रसाद मल्ली लगायतका लायन्स लिडरहरुले उपस्थित सबै लायन लिडरहरुलाई शुभकामना दिँदै सेवाका गतिविधि बढाउन आग्रह गरे। कार्यक्रममा बाल प्रतिभा, सामाजिक अभियन्ता प्रिन्सा रेग्मीले बालबालिका र अभिभावक बीचको सम्बन्धका बारेमा आफ्नो मन्तव्य दिएकी थिइन्।

क्याबिनेट सेक्रेटरी लायन कृष्ण बहादुर अधिकारीले डिष्ट्रिक्टबाट भएका विभिन्न कार्यक्रमहरुको बारेमा संक्षित जानकारी गराए। त्यस्तै क्याबिनेट ट्रेजरर लायन कल्पना थापाले आय व्यय विवरण प्रस्तुत गरेकी थिइन्।

सिल्भर प्यालेस पार्टी भेन्यूमा भएको कार्यक्रममा बागमती, गोर्खा, गण्डकी तथा धौलागिरी क्षेत्रका विभिन्न पदमा रहेका क्याबिनेट अफिसर्स, क्लब प्रेसिडेन्ट लगायत करिब ७७० जनाको उपस्थिती रहेको डिष्ट्रिक्टका पिआरओ चिफ लायन रामराजा थापाले जानकारी दिए।

# जसपा नेपालको टिकटमा कीर्तिपुरको मेयरमा तेस्रो लिङ्गीको उम्मेदवारी




काठमाडौं। मङ्सिर १६ मा हुन लागेको स्थानीय तह उपनिर्वाचनमा काठमाडौं जिल्लाको कीर्तिपुर नगरपालिकाको लागि हुन लागेको चुनावमा तेस्रो लिङ्गी महिला दीपक महर्जन (हनि) र राजीव महर्जन (मौनी)को उम्मेदवारी घोषणा भएको छ। उपेन्द्र यादव नेतृत्वको जनता समाजवादी पार्टी नेपाल (जसपा)ले कीर्तिपुर नगरपालिकाको नगर प्रमुखमा तेस्रो लिङ्गी महिला हनि र वडा नं ४ को वडाअध्यक्षमा मौनीलाई उम्मेदवार बनाउने घोषणा गरेको हो।

यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायको अधिकारका लागि वकालत गर्दै आएको मायाको पहिचान नेपालको पहलमा हनि नगर प्रमुख र मौनी वडाअध्यक्ष पदमा उम्मेदवार बन्न सफल भएका हुन्। मायाको पहिचान नेपालले राजनीतिमा यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायको सहभागिता र प्रतिनिधित्वबारे गरेको छलफलमा हनि र मौनीले उम्मेदवार बन्ने चाहना व्यक्त गरेका थिए।

उनीहरुको चाहना पुरा गर्न मायाको पहिचान नेपालले जसपा नेपालको कार्यालयमा पुऱ्याएर उम्मेदवार बनाउन आग्रह गऱ्यो। हामी हनि र मौनीलाई लिएर जसपा नेपालको पार्टी कार्यालय गयौँ, उम्मेदवार बनाउन प्रस्ताव राख्यौँ, मायाको पहिचान नेपालका सचिव सुरेन्द्र पाण्डेले भने, उहाँहरूले सकारात्मक रूपमा लिनुभयो, टिकट दिनुभयो, अब विजयी गराउन लाग्नेछौं। मायाको पहिचान नेपालको कार्यालयमा शनिवार पत्रकार सम्मेलन गरेर हनि र मौनीले उम्मेदवारी घोषणा गरेका हुन।

कार्यक्रममा जसपा नेपालका उपाध्यक्ष विद्युत् बज्राचार्यले राज्यको ध्यान नगएको अवस्थामा पार्टीको ध्यान जानु पर्छ भनेर तेस्रो लिङ्गीलाई उम्मेदवार बनाउने घोषणा गरेको बताए। उनले कीर्तिपुर नगरको नगर प्रमुख र वडाअध्यक्षमा पार्टीका उम्मेदवारलाई निर्वाचित गराउन सिङ्गो पार्टी लागेको बताए।

जसपा नेपालका केन्द्रीय सदस्य राजन केसी, सन्तोष सिलवाल, विना सिन्हा, केन्द्रीय निर्वाचन प्रतिनिधि मनोज वर्मा, केन्द्रीय पहिचान विभागका प्रतिनिधि विकास कान्छा ब्लोन, नेवा प्रदेश सदस्य राकेश श्रेष्ठ, मायाको पहिचान नेपालका सचिव सुरेन्द्र पाण्डे, नेपालमा दोस्रो पटक भएको मिस्टर गे हेन्डसमका उपाधि विजेता मनिन्द्र सिंह दनुवारलगायतले कीर्तिपुर नगरको पहिचानसँगै विकासका कामलाई अगाडी बढाउन पार्टीका उम्मेदवारको ठुलो भूमिका रहने विश्वास व्यक्त गरे।

नगर प्रमुखका उम्मेदवार हनिले जसपा नेपालले उम्मेदवार बनाएकोमा गर्व लागेको बताए। उनले दबिएर बस्नु पर्ने अवस्थामा रहेका यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायको समस्या समाधानसँगै कीर्तिपुरको विकासमा महत्त्वपूर्ण योगदान गर्ने बताए। सबै खाले शोषण, उत्पीडन र विभेदको अन्त्य गर्न सधैँ सङ्घर्षरत रहने शपथ खाएका हनिले कीर्तिपुर नगरपालिकामा तेस्रो लिङ्गी महिलाको रुपमा पहिलो पटक उम्मेदवारी दिन लागेका हुन्।

देशभरका स्थानीय तहको नेतृत्वमा पुरुष र महिला मात्र छन्। कीर्तिपुर नगरमा पहिलो पटक तेस्रो लिङ्गी महिलाले उम्मेदवारी घोषणा गरे लगत्तै नगरवासीमा चासो बढेको छ। हनिले हाम्रो सपनाको सहर, कीर्तिपुर नगर नारा राखेर आफ्ना प्रतिबद्धता पनि सार्वजनिक गरेकी छन्। इमानदारिता, निजी वा व्यक्तिगत स्वार्थबाट माथि उठेर स्वच्छ एवं नैतिक आचरणयुक्त जीवन बिताउनेछु, हनिले जसपा नेपालको शपथ लिँदै भनेकी छन्, स्वतन्त्रता, समानता, सामाजिक न्याय र समाजवादका लागि लडिरहनेछु।

हनिको चुनावी प्रतिबद्धता

सफा, स्वच्च र सुन्दर कीर्तिपुरलाई भ्रष्टाचार मुक्त नगर बनाउने प्रतिबद्धता हनिले गरेकी छन्। विद्युतीय सुशासन सेवालाई प्रभावकारी बनाउने, युवा बेरोजगारी अन्त्य गर्ने र रोजगारीको व्यवस्था गर्ने मेयरका उम्मेदवार हनिको घोषणा पत्र सार्वजनिक भएको छ।

उद्यमी बन्न प्रोत्साहन पुग्ने कार्यक्रम सञ्चालन गर्ने, पदमार्गहरूको पहिचान गर्ने र पर्यटकहरूका लागि घुम्नै पर्ने सहरका रूपमा विकास गर्ने उनको अर्को घोषणा छ। कर प्रणालीलाई न्यायसङ्गत बनाउने, घरजग्गा कर समायोजन गरेर राहत दिने र वृद्धवृद्धालाई घरमै स्वास्थ्य सेवा पुऱ्याउने प्रतिबद्धता हनिले गरेकी छन्।

धार्मिक एवं पर्यटकीय सम्पदाहरूको संरक्षण गर्ने, हराउँदै गएका नेवा संस्कृतिको जर्गेना गर्ने र इन्द्रेणी पर्यटकको पहिलो गन्तव्यको रूपमा विकास गर्ने हनिको प्रतिबद्धता रहेको छ।

ढल, खानेपानी, सडक बाटोको मर्मत, संहारको काम व्यवस्थित बनाउने र विकासमा जनताको सहभागितालाई सुनिश्चित गर्ने हनिको चुनावी प्रतिबद्धता छ। आधुनिक भौतिक पूर्वाधारको विकास गर्ने, वातावरण संरक्षणका लागि प्रदूषण नियन्त्रण गर्ने र पार्क तथा हरित क्षेत्र निर्माण गर्दै नगरवासीको जीवनस्तरमा वृद्धि गर्ने योजना पनि हनिले सार्वजनिक गरेका छन्।

सामाजिक परिवर्तनको मूल मर्म विथोल्नेविरुद्ध मैत्रीपूर्ण वैचारिक सङ्घर्षलाई अगाडि बढाइने, यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक र उत्पीडित वर्ग समुदायलाई विकासको मूल

# तीन दिने योग शिविर तथा भजन कार्यक्रम

मध्यपुर थिमि। नेवाः बस्तीको रुपमा रहेको थिमिका हरेक टोल टोलमा बिहान बेलुका मन्दिर परिसर रहेको स्थान र लाछीहरुमा नियमित रुपमा भजन हुने गर्दछ। तर पछिल्लो समय यस प्रकारका भजन प्रति युवाहरुको आकर्षण कम हुँदै गएको र जेष्ठ नागरिकहरुसमेत स्वास्थ्य र विभिन्न कारणबाट सहभागितामा कमि हुँदै जाँदा भजन खलःहरु हराउँदै गइरहेको अवस्थामा मध्यपुर थिमिको लाछीटोलमा रहेका बासिन्दाहरु र युवाहरुको सक्रियतामा गत वर्ष लाछी टोल भजन खलःको स्थापना गरि प्रत्येक शनीबार, एकादशी र विभिन्न चाडपर्वहरुमा नियमित रुपमा भजन गर्न श्याम सुन्दर श्रेष्ठको अध्यक्षतामा भजन खलःको स्थापना भएको थियो।

सोही भजन खलःको एक वर्ष पुगेको अवसर पारेर लाछीटोलमा ३ दिने योग शिविर तथा मंसीर १ गते बृहत भजन कार्यक्रम गरी स्थापना दिवस मनाएको अध्यक्ष श्रेष्ठले जानकारी दिए। साथै श्रेष्ठले आगामी दिनमा टोल छिमेकमा टोलबासीको स्वास्थ्य लगायत सांस्कृतिक कार्यमा निरन्तर कार्य गर्दै जाने योजना रहेको जानकारी दिए।

# इजरायली आक्रमणमा परि दुई सय बढी बालबालिकाको मृत्यु



एजेन्सी- इजरायलले हिजबुल्लाहलाई लक्षित गरी लेबनानमा गरेको आक्रमणमा दुई महिना भन्दा कम समयमा २०० भन्दा बढी बालबालिकाको मृत्यु भएको संयुक्त राष्ट्रसङ्घले मंगलबार जनाएको छ। यो कहाली लाग्दो घटनाले चिन्ताजनक अवस्था  देखा परेको जनाउदै राष्ट्रसङ्घीय बाल एजेन्सी युनिसेफका प्रवक्ता जेम्स एल्डरले बालबालकाको मृत्यु र हिंसा रोक्न अत्यावश्यक रहेको बताए।

उनका अनुसार लेबनानमा पछिल्लो दुई महिनामा हरेक दिन औसतमा तीन जना बालबालिकाको मृत्यु भएको छ भने एक हजार एक सय बढी बालबालिका घाइते भएका छन्। हिज्बुल्लाहले गत वर्षको अक्टोबरमा गाजामा प्यालेस्टिनी उग्रवादी समूह हमासको समर्थनमा इजरायलमा रकेट प्रहार गर्न थालेको थियो।

गत सेप्टेम्बर देखि, इजरायलले लेबनानमा हिजबुल्लाहको गढलाई लक्षित गर्दै व्यापक अभियान सञ्चालन गरेको छ, यद्यपि केही आक्रमणले इरान समर्थित समूहको नियन्त्रण बाहिरका क्षेत्रहरूमा प्रहार गरेका छन्। इजरायलमा हिजबुल्लाहको आक्रमणबाट झडप सुरु भएदेखि लेबनानमा तीन हजार ५०१ जना भन्दा बढी मानिसको मृत्यु भएको छ।  गत वर्षको अक्टोबरमा गाजामा युद्ध सुरु भएदेखि लेबनानमा कम्तीमा २३१ बालबालिकाको मृत्यु भएको एल्डरले बताए।

लेबनानमा पनि गाजामा जस्तै डरलाग्दो बालबालिकाको नरसंहार चलिरहेको बताउँदै उनले घरबारविहीन भएका लाखौं बालबालिकाहरू आधारभुत पूर्वाधार तथा चिकित्सा सुविधा अभावमा रहेको बताए। लेबनानी अधिकारीहरूका अनुसार नोभेम्बर-१५ देखि २०० भन्दा बढी स्वास्थ्य कर्मचारीहरूको मृत्यु भएको छ भने ३०० भन्दा बढी घाईते भएका छन्।

# अमेरिकी विशेष दूत होचस्टेन लेबनानमा



एजेन्सी - अमेरिकी विशेष दूत अमोस होचस्टेन अधिकारीहरूसँग युद्धविराम वार्ताका लागि मङ्गलबार लेबनान पुगेका छन्। हाल अमेरिका र फ्रान्सले इजरायल र हिजबोल्लाहबीच युद्धविरामको  नेतृत्व गरेका छन् जसको नेतृत्व गर्दै  होचस्टेन लेबनान पुगेका हुन्। सन् २०२३ अक्टोबर-७ को आक्रमणबाट गाजामा युद्ध सुरु भए देखि प्यालेस्टिनी सहयोगी हमासको समर्थनमा हिजबुल्लाहले गरेको आक्रमणामा करिव एक वर्षपछि, सेप्टेम्बर-२३ मा, इजरायलले सेना पठाउनु अघि लेबनानमा हवाई आक्रमण भएको छ।

लेबनानका एक अधिकारीले अमेरिकी युद्धविराम प्रस्तावको बारेमा सरकारको सकारात्मक दृष्टिकोण रहेको बताए भने अर्का अधिकारीले लेबनान उहाँसग निर्धारित बुँदामा समीक्षा गर्न होचस्टेनको आगमनको पर्खाइमा रहेको बताएका छन्। लेबनान भ्रमणको जानकारी गराउँदै अमेरिकी विदेश मन्त्रालयका  प्रवक्ता म्याथ्यू मिलरले  वासिङ्टनले लेबनान र इजरायली सरकार हरूसँग निर्धारित प्रस्तावहरूमा समन्वय गरिरहेको बताएका छन्।

मिलरले अमेरिकाले राष्ट्रसङ्घीय सुरक्षा परिषद्को प्रस्ताव-१७०१ को 'पूर्ण कार्यान्वयन' को लागि दबाब दिइरहेको बताउँदै लेबनानी र राष्ट्रसङ्घीय सेना बाहेक सबै सेनाहरू इजरायलको सिमाना लेबनानबाट फिर्ता लिन आवश्यक रहेका बताए। इजरायली प्रधानमन्त्री बेन्जामिन नेतान्याहूले भने सम्झौता भए पनि इजरायलले उक्त समूहलाई पुनः निर्माण गर्नबाट रोकी हिजबुल्लाह विरुद्ध कारबाही गर्ने" बताए।

यस अघि एक लेबनानी अधिकारीले अमेरिकी दूत लिसा जोनसनले बिहीबार प्रधानमन्त्री नाजिब मिकाती र हिजबुल्लाह-सहयोगी संसदीय अध्यक्ष नबीह बेरीसँग उक्त योजना बारे छलफल गरेको बताए।

कुनै सहमति भएमा अमेरिका र फ्रान्सले संयुक्त विज्ञप्ति जारी गने बताउँदै उनले ६० दिनको युद्धविराम पछि लेबनानले इजरायल नजिकैको दक्षिणी सीमा क्षेत्रमा सेना पुनः तैनाथ गर्ने बताए। लेबनानी अधिकारीहरूले गत वर्षको अक्टोबरमा झडप सुरु भएदेखि यस क्षेत्रमा तीन हजार ५१० भन्दा बढी मानिसको मृत्यु भएको तथा सेप्टेम्बरको अन्त्यदेखि सबैभन्दा बढी मृत्यु भएको बताएका छन्।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### वायु प्रदूषणमा छद्म महामारीको जोखिम

अहिले बिश्वमा नै उष्णतामा बृद्धि भइरहेको छ । साथै कार्वन उत्सर्गतामा पनि विश्वका विकसित राष्टहरु अग्रपंक्तिमा देखिएको कारण यसको बढी मार भने अल्पविकसित र कमजोर राष्ट्रहरुमा देखिएको छ । हाम्रै देशमा पनि उत्तरतिरका मनमोहक हिमाल श्रृङ्लामा बाह्रै महिना देखिने हिउँ देखिन छाडेको छ ।

यसले विश्वकै अति घनत्व भएका शहरहरु मानव जनजीवनको लागि घाटक बन्दै गइरहेको छ । यो विषय अहिले विश्वकै लागि पनि टाउको दुखाईको विषय बनेको छ । भारतको राजधानी नयाँ दिल्ली र यसको वरपरको हावा सास फेर्नै नहुने गरी प्रदूषित भएको समाचार प्रकाशित भएको छ । यो वर्ष नयाँ दिल्ली क्षेत्रको वायु पहिले नै ‘ अतिविषाक्त’ भइसकेको थियो । सरकारले बढी वायु प्रदूषण गर्ने केही सवारी साधन चलाउन रोक लगाएको छ ।

त्यस्तै पाकिस्तानको पञ्जाब सरकारले अत्याधिक वायु प्रदूषणका कारण लाहोर र मुल्तान क्षेत्रमा ‘स्वास्थ्य सङ्कटकाल’को घोषणा गर्दै लकडाउन गरेको छ । बजार, कलकारखाना, विद्यालयलगायत जनजीवनसँग सम्बन्धित सबै क्षेत्र केही दिन बन्द गर्ने घोषणा गरेको छ। साथै हाम्र देशको राजधानीको रुपमा रहेको काठमाडौंको वायु प्रदूषणको स्तर पनि निकै खराब भइसकेको छ । यो स्तर बिश्वकै दश ढला शहर भित्र प्रदुषित शहरको रुपमा रहेको बिश्व स्वास्थ्य संघको प्रतिवेदनमा उल्लेख गरिएकोले यहाँको संवेदनशील समूहका लागि हावामा सास फेर्नु ‘जोखिमपूर्ण’ बन्दै गएको छ । मूलतः दमका रोगी, बूढापाका र बालबालिकालगायत लामो समय घर बाहिर हिँडडुल वा कामकाज गर्नु नहुने बताइएको छ ।

तर सरकारी तहबाट वायु प्रदूषण नियन्त्रणका लागि कुनै ठोस प्रयास गरिएको छैन । काठमाडौं शहर चारैतर्फ पहाडले घेरिएको खोचमा रहेको कारण उपत्यकाबाट प्रदूषित हावा बिरलै बाहिर निस्कन्छ । ठूलो हावा हुरी वा वर्षा नहुँदासम्म यहाँको वायु प्रदूषण कम हुँदैन ।

तर, सरकारले विधि र निषेधका उपायहरू अपनाउने हो भने सायद सास फेर्नसम्म हुनेगरी वायु स्वच्छ बनाउन सकिन्छ । हावालाई विषालु बनाउन तत्त्व विशेषगरी धुवाँ र धुलो नियन्त्रण गर्ने प्रयास गरिएमा पानी नपर्दासम्म वायु प्रदूषण बढ्ने क्रम रोकिन सक्छ ।

प्रदूषणको मापदण्ड पूरा नगर्ने सवारी साधनले फाल्ने धुँवाआदि काठमाडौंका मूल प्रदूषक मानिन्छन् । हावालाई थप बिखालु नबनाउने हो भने यिनलाई नियन्त्रण गर्नुपर्छ । सडकमा सवारी साधन नियन्त्रण गरे तत्काल वायु प्रदूषण कम हुनसक्छ तर त्यो उपाय व्यवहारमा उति सहज हुँदैन । तर, प्रदूषणको जाँच प्रभावकारीरूपमा गर्ने हो भने पक्कै पनि सवारी साधनबाट हुने प्रदूषण रोक्न सकिन्छ । तत्कालका लागि केही समय आलोपालो पद्धति अपनाए पनि वायु प्रदूषण कम हुनेछ ।

निर्माण कार्यबाट धुलो उँड्न नदिनुका साथै इटाभट्टाबाट पनि धुलो र धुवाको मात्र कम गर्न विभिन्न उपाय अपनाउन सकिन्छ । वायु मण्डलमा धुवाँ थपिने गरी खुला ठाउँमा फोहोर र घुरान पोल्न रोक्न जनचेतना र निगरानी बढाउनुपर्छ । सास फेर्ने हावा नै बिखालु भएपछि जनजीवन स्वस्थ्य हुने त कल्पना गर्न सकिँदैन । यसैले बिषालु हावामा सास फेर्न नपर्ने बनाउन केही प्रयास नगर्ने शासकहरूले जनस्वास्थ्यको चिन्ता गर्नु जनताको उपहास गरेजस्तै हो ।

अहिले तीनै तहका सरकारका देशमा स्वास्थ्य र शिक्षा सहजताको लागि नारा दिइरहेको छ । तर मानवजनजीवनको लागि अत्यावश्यक रहेको वायुमण्डल दुषित हुन नदिनको लागि कुनै ठोस कदम चालेको देखिदैन । यसमा समुदायस्तर पनि चिन्तित भएको देखिदैन । वायु प्रदूषणले ‘छद्म महामारी’को रूप लिइरहेको अवस्था छ । तीन तहको रुपमा रहेको सरकार पनि जनताप्रति उत्तरदायी हुन आवश्यक छ । सरकारहरूले पनि तत्काल वायु प्रदूषण रोक्न आवश्यक नीति तथा संरचना निर्माण गरेर हामीले बाँच्नको लागि स्वास फेर्न आवश्यक हावा स्वच्छ बनाउन सम्भावित प्रयत्न गर्दै जनस्वास्थ्य प्रति कार्य गरोस् ।

# विस्तृत शान्ति सम्झौताको १८ वर्ष : कानुनी उल्झन हट्यो तर हटेन पीडितमा न्याय नपाउने चिन्ता

● डाकमान राई

काठमाडौँ : १० वर्ष रणभूमि बनेको नेपाल शान्तिपूर्ण बाटोमा अघि बढेको अर्थात् विस्तृत शान्ति सम्झौता भएको १८ वर्ष पूरा भएको छ। २०६३ मंसिर ५ मा तत्कालीन सरकार र सशस्त्र विद्रोही माओवादीबीच द्वन्द्वको विधिवत् अन्त्य गरेर शान्तिपूर्ण ढंगले अघि बढ्ने सहमति भएको थियो।

विस्तृत शान्ति सम्झौतामा तत्कालीन प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला र माओवादीका अध्यक्ष पुष्पकमल दाहाल प्रचण्डले हस्ताक्षर गरेका थिए। दिगो शान्ति कायम गर्न शान्ति सम्झौतामा सेना समायोजन तथा हतियार व्यवस्थापन, संविधानसभामार्फत संविधान निर्माण तथा कार्यान्वयन र संक्रमणकालीन न्यायलाई टुंगोमा पुऱ्याउने विषय विशेष प्राथमिकतामा राखिएका थिए।

तीमध्ये २ विषय टुंगिए पनि संक्रमणकालीन न्यायको मुख्य काम नै बाँकी छ- त्यो हो पीडितलाई न्याय। राजनीतिक दलहरूले यसलाई पालैपालो सत्ताको भऱ्याङ बनाउँदा विस्तृत शान्ति सम्झौता भई राजनीतिक परिवर्तनसहित देश निकै अगाडि बढिसक्दा पनि यो विषय अल्झिएको हो।

यसबीचमा शान्ति सम्झौताका हस्ताक्षरकर्ता प्रचण्ड स्वयंले तीन पटक सत्ताको नेतृत्व गरे। अर्का हस्ताक्षरकर्ता दिवंगत कोइरालाको पार्टी नेपाली कांग्रेस पनि कहिले सारथी बनेर त कहिले आफैँ नेतृत्वमा पुग्यो। अर्को दल एमालेलेसमेत पटक-पटक देशको नेतृत्व गरे पनि पीडितसम्म न्याय पुग्न सकेन।

सम्झौताअनुसार ६ महिनामा गर्नुपर्ने कामका लागि ८ वर्षपछि विसं २०७१ मा संक्रमणकालीन न्यायसम्बन्धी ऐन बन्यो तर गम्भीर मानवअधिकार उल्लंघनका दोषीलाई आममाफी दिने प्रावधान राखिएपछि यो विषय विवादमा तानियो।

त्यसपछि ऐनको उक्त व्यवस्थालाई बदर गर्दै सर्वोच्च अदालतले त्यसमा संशोधन गर्न आदेश दिएको थियो। सर्वोच्चको आदेशपछि संक्रमणकालीन न्यायसम्बन्धी (टिआरसी) ऐन, २०७१ लाई संशोधन गर्न बनेको विधेयक लामो समय गिजोलियो।

राष्ट्रिय तथा अन्तरराष्ट्रिय स्तरबाट दबाब थेगिनसक्नु भएपछि भने यससम्बन्धी कानुन संशोधनमा दलहरू सहमत भए। साउन ३० मा प्रतिनिधिसभा र ६ भदौमा राष्ट्रियसभाबाट पारित भएको टिआरसी संशोधित ऐन भदौ १३ मै राष्ट्रपतिबाट प्रमाणीकरण भएर कार्यान्वयनमा गइसकेको छ।

तर कानुनी बाटो खुला भए पनि बाँकी प्रक्रिया निकै सुस्त देखिन्छ। कानुन संशोधनपछि ३ महिनाको अवधिमा संक्रमणकालीन न्यायसम्बन्धी २ आयोगमा पदाधिकारी सिफारिस गर्ने समिति बनाउनु नै सरकारको प्रगति हो।

२०७९ असारदेखि पदाधिकारीविहीन भएका सत्य निरुपण तथा मेलमिलाप आयोग र बेपत्ता पारिएका व्यक्तिकोहरूको छानबिन आयोगमा पदाधिकारी नियुक्तिका लागि सरकारले कात्तिक २ मा सिफारिस समिति बनाएको हो।

पूर्वप्रधानन्यायाधीश ओमप्रकाश मिश्रको अध्यक्षतामा बनेको समितिमा मानवअधिकार आयोगका आयुक्त मनोज दवाडी, पूर्वराजदूत अर्जुनबहादुर कार्की, आदिवासी जनजाति महिला महासंघकी संस्थापक अध्यक्ष स्टेला तामाङ र पूर्वमहान्यायाधिवक्ता खम्बबहादुर खाती सदस्य छन्।

उक्त समितिले छनोट प्रक्रियाको मस्यौदा तयार पारेर पदाधिकारीका लागि दरखास्त माग गर्नुबाहेक थप प्रगति गरेको छैन। अन्तिम पटक थपिएको म्याद मंगलवार (मंसिर ४) मा सकिएको छ।

समिति सदस्य खातीले थप आवेदकहरूबारे थप अध्ययन गरेर अरु प्रक्रिया अघि बढाउने बताए। ‘अब आवेदकहरूको स्टडी गर्छौं। त्यसपछि मानव अधिकारसम्बन्धी विशेष योगदान गर्न सक्नेहरूको संक्षिप्त सूची तयार हुन्छ। उहाँहरुसँग पनि थप छलफल गरेर क्रमशः नियुक्तिको प्रक्रियालाई छिट्टै टुंग्याउने गरी काम गर्छौं।’

कानुन संशोधन भए पनि सुस्त गतिमा भइरहेको कामलाई तीव्रता दिएर पीडितलाई छिटो न्याय दिलाउनुपर्नेमा पक्षमा माओवादी छ। माओवादी उपाध्यक्ष एवं प्रवक्ता अग्नि सापकोटा अघि काम अघि बढिरहेको वेला अरु टिप्पणी नगरे पनि छिटो हुनुपर्नेमा जोड दिन्छन्।

‘कानुन संशोधन भइसक्यो, अहिले आयोगहरूमा पदाधिकारी नियुक्तिको काम अघि बढ्दै होला। यसमा थप टिप्पणी गर्दा झन् बिग्रेला’, उनी भन्छन्, ‘तर यो अझ छिटो भइदियोस् भन्ने हाम्रो चाहना हो।’

‘ढिला न्याय भनेको अन्याय हो’

कानुनी अड्चन हटिसकेपछि न्याय निरुपणका अन्य प्रक्रियामा ढिला गर्न नहुनेमा मानव अधिकारकर्मी जोड दिन्छन्। अब थप ढिला गरिए वा केही गरी यस पटकको प्रयास सार्थक नबनेमा अर्को झन्झट आइलाग्ने मानव अधिकार आयोगका पूर्वसदस्य गौरी प्रधान बताउँछन्।

उनी भन्छन्, ‘ढिला न्याय दिनु भनेको अन्याय गर्नु हो। एकदमै ढिलो भइसक्यो। अहिले कानुन संशोधन भएर पनि थप ढिला भइरहेको छ। अब छिटो गरिएन वा सार्थक हुन सकेन भने झन् अर्को झन्झट र संकट हुन्छ।

विगतमा आफूलाई सहज हुनेगरी आयोगहरूमा पदाधिकारी नियुक्त हुँदा न्याय निष्कर्षमा पुग्न नसकेकोले अब भने स्वतन्त्र र क्षमतावानलाई त्यो जिम्मेवारी दिनुपर्ने मानव अधिकारकर्मी प्रधान जोड दिन्छन्।

‘अब पीडित पक्षलाई पनि स्वीकार्य हुने, अन्तरराष्ट्रिय समुदायलाई पनि स्वीकार्य हुने र मानव अधिकारको क्षेत्रमा पनि स्वीकार्य हुने हुनुपऱ्यो। यसअघिको जस्तो आफूलाई सहज हुने खालको मान्छे राख्ने गरिनु हुँदैन। आयोग त गठन गऱ्यो तर स्वतन्त्र ढंगले काम गर्न पाएन भने अफठ्यारो हुन्छ ’, उनी भन्छन्, ‘त्यसकारण त्यस्तो व्यक्ति आउनुपऱ्यो, जसले यो यो नीतिअनुसार यो हुन्छ र त्यो हुँदैन भन्ने सक्नुपर्छ। आवश्यक प्रमाणहरू खोज्न सक्ने, समन्वय गर्न सक्ने, यसअघि आयोगले फेला पारेका प्रमाण वा दस्तावेजहरूलाई सही ढंगले अध्ययन गर्न सक्ने, आवश्यक परे थप स्थलगत अध्ययन गरेर सत्यतथ्य प्रमाणित गर्न सक्ने हुनुपर्छ।’

साथै सरकारले आयोगलाई कुनै स्रोत साधनको कमी नहुनेमा पनि ध्यान पुऱ्याउनुपर्ने प्रधान बताउँछन्। उनी भन्छन्, ‘प्राविधिक टोली पनि चाहिन्छ। अन्य स्रोतसाधन अभाव हुन सक्छ, त्यस्ता कुरामा पनि ध्यान पुऱ्याउनुपर्छ र चाँडोभन्दा चाँडो पीडितसम्म न्याय पुऱ्याउनुपर्छ।’

पीडित चिन्तामै

लामो समयसम्म न्याय नपाएर निराश बन्दै गएका पीडितहरू भने कानुन संशोधनपछि अन्य प्रक्रिया अघि बढिरहँदा पनि न्याय पाउनेमा सशंकित नै देखिन्छन्। वरिष्ठ अधिवक्तासमेत रहेका बेपत्ता परिवार समाजका संस्थापक अध्यक्ष एकराज भण्डारी दलहरूकै स्वार्थले कानुनी बाटो खुलेपछि पनि ढिला भएको र आयोगहरू बने पनि पीडितहरूले साँच्चिकै न्याय पाउनेमा आशंका व्यक्त गर्छन्।

कानुन र आयोग निर्माणभन्दा महत्वपूर्ण विषय पीडितको सन्तुष्टि भएको भण्डारीको बुझाइ छ। ‘हिजो जुन कुरा थिएन र आयोगले काम गर्न सकेको थिएन र आजको कानुनमा त्यस्तो के छ जसकारण तुरुन्त शान्ति प्रक्रियाका सबै विषय टुंगिन्छन्? यसमा कुनै सुनिश्चितता छैन’, उनी भन्छन्, ‘ठूलो विषय भनेको त वास्तविक पीडितको पीडालाई हल गर्न कुरा हो नि! तर यिनीहरू (राजनीतिक दल)ले गरेनन्/गर्दैनन्। कानुन त ल्याए, अब आयोग पनि बनाउलान्, तर शान्ति प्रक्रिया टुगिँदैन।’

पीडितको वास्तविक मर्का कसैले कहिल्यै नबुझेको भण्डारीको गुनासो छ। ‘पीडितको वास्तविक मर्का कसैले बुझेनन्। हाम्रो परिवार गुमेको छ सम्मान गरिदेऊ, बुढा बाउआमा, छोराछोरी क्यान्सर र मृगौलापीडित छन् हेरचाह गरिदेऊ, बेरोजगार भएर हैरान छ कमसेकम एउटा व्यवस्था गरिदेऊ भनेको न हो’, उनी भन्छन्, ‘तर काम किन भएन भने सरकार कसको दलको, दल कसको नेताको, नेता कसको दलालको भए। सबै दलालहरूले किन्ने र बिक्री हुने भाछन्, कसरी हुन्छ पीडितलाई न्याय?’

थाहाखबर

# राजस्व उठाउन र बजार चलायमान बनाउन यी निर्णय गर्ने कि सरकार !

रुषा थापा

हरेक हप्ता सोमबार र बिहिबार दुई दिन मन्त्रिपरिषद् बैठक बस्ने गरिन्छ । क्याबिनेट बैठक एकै दिन बसेपनि देश र जनताको हितमा दर्जनौं निर्णय गर्न सक्छ । सरकारी स्वामित्वको महालेखा परीक्षकको कार्यालयअनुसार चालु आर्थिक वर्षको पछिल्लो चार महिना (साउनदेखि कात्तिकसम्म) मा आम्दानीभन्दा खर्च बढी भएको छ ।

यस अवधिमा राज्यको ढुकुटीमा तीन खर्ब राजस्व संकलन हुँदा खर्च भने चार खर्ब बढी भएको तथ्यांक छ । राजस्व संकलन गर्न सरकारको अधिकार, दायित्व र कर्तव्य सबै हो । राजस्व उठाउने काम सरकारले मात्र गर्न सक्छ । यद्यपि, पछिल्लो समय राज्यको ढुकुटीमा निकै कम राजस्व संकलन हुन थालेको छ ।

राजस्व नउठेपछि अर्थमन्त्री विष्णु पौडेलले कर्मचारीमाथि आक्रोश समेत पोख्दै आएका छन् । अर्थमन्त्रीले जतिसुकै कराएपनि राजस्व उठ्ने छैन । किनकि सरकारी कर्मचारी भनेकै दिन कटाउने, मानो चटाउने हुन् । उनीहरुले जागिर मात्र खाएका हुन् । त्यसैले, अब प्रधानमन्त्री केपीशर्मा ओलीले भाषण गरेर, उद्घाटन गरेर समय खेर फाल्ने होइन ।

धमाधम मन्त्रिपरिषद्मार्फत निर्णय गर्ने हो । विदेशी ऋण मिनाहा गर्नका लागि पत्र लेख्नुपर्छ । र, जनप्रतिनिधिहरुलाई दिएको तलब, सेवासुविधा कटौती गर्नुपर्छ । कर्मचारीलाई मासिक रुपमा नभई काम गरेको आधारमा घण्टाको हिसाबले तलब दिनुपर्छ । उनीहरुलाई दिइएको पोशाक, सरकारी गाडी वा सेवासुविधा पनि कटौती गरिनुपर्छ ।

कर्मचारी र जनप्रतिनिधिको अनावश्यक देश-विदेश भ्रमणमा पनि रोक लगाउनुपर्छ । यता, आवश्यकताभन्दा बढी करार, ज्यालाका कर्मचारी पनि हटाउनुपर्छ । सरकारी गाडी किन्न रोक्नुपर्छ । अहिले सरकारी कर्मचारी र जनप्रतिनिधिहरु आफुखुशी गाडी किन्छन् । अर्थ मन्त्रालय पनि गाडी किन्ने भन्नेबित्तिकै बजेट दिन्छ ।

फेरि किनिएका गाडीको अवस्था कस्तो छ ? भनेर चाँहि निगरानी गर्दैन । कर्मचारी र जनप्रतिनिधिहरु नयाँ गाडी किनेको केही समयमै थन्काउँछन् अनि फेरि गाडी किन्न बजेट माग्छन् । अहिले अधिकांश सरकारी कार्यालयमा सरकारी गाडी अलपत्र अवस्थामा भेटिन्छन् । त्यसैले, अब सरकारी गाडी किन्नमा पनि प्रतिबन्ध लगाउनुपर्छ ।

कर्मचारी र जनप्रतिनिधिलाई सरकारी गाडी दिनै सरकारले रोक लगाउन आवश्यक छ । किनकि उनीहरुलाई मासिक रुपमा तलब, भत्ता दिएपछि किन गाडी दिइरहनु पर्यो ? कर्मचारी वा जनप्रतिनिधि हिँडेर कार्यालय आओस् या गाडीमा त्यो सर्वसाधारणको चासोको विषय होइन । त्यसकारण अब सरकारले कर्मचारी र जनप्रतिनिधिलाई गाडी दिन, किन्न, चढ्नमा रोक लगाउनुपर्छ ।

अर्को मुख्य कुरा खाजा । सरकारी कार्यालयहरुमा दिनहुँजसो बैठक बस्ने गरिएको छ । कुनै

विषय नै नभएपनि बैठक बसिन्छ । त्यो पनि कार्यालय समयबाहेक । कार्यालय समयमा कर्मचारी, जनप्रतिनिधिहरु बैठक बस्दैनन् । किनकि त्यो बेला बसेमा भत्ता पाइदैंन । बैठक बस्दा पाँच जना सहभागी भएमा २० जनाका लागि खाजा ल्याइन्छ ।

त्यो पनि महँगा महँगा । पानी पनि बाहिरैबाट ल्याइन्छ । मिनिरल वाटर । कुनै पनि सरकारी कार्यालयमा एक चोटी बैठक बस्दा लाखौं रकम सिद्धिने गरेको छ । त्यसैले, अब सरकारले अत्यावश्यकबाहेक अन्य समयमा सरकारी कार्यालयमा बैठक बस्न पनि रोक लगाउनुपर्छ । साथै, बैठकमा महँगा खाजा, पानीको प्रयोगमा पनि प्रतिबन्ध लगाउनुपर्छ ।

पछिल्लो समय त कर्मचारी र जनप्रतिनिधिमा नयाँ प्रवृत्ति देखिन थालेको छ । कार्यालय खाली हुँदाहुँदै उनीहरु महँगा होटलमा बैठक बस्छन् । जसले एकै पटक लाखौं रकम खर्चिने गरेको छ । हामी सर्वसाधारण जनता दिनरात पसिना बगाएर काम गरी राज्यलाई कर तिर्ने अनि कर्मचारी, जनप्रतिनिधिहरु चाँहि त्यसमा मोजमस्ती गर्ने ।

अब यो कदापि सहनीय हुदैंन । राज्यको ढुकुटीमा राजस्व उठ्न छोडिसक्यो । तर, कर्मचारी, जनप्रतिनिधिलाई केही मतलब नै छैन । उनीहरुलाई कसरी लुट्ने भन्ने मात्र छ । ज्येष्ठ नागरिक, एकल महिला, अपांगता भएका व्यक्तिलाई सरकारले सामाजिक सुरक्षा भत्ता दिदैं आएको छ । चुनावको समयमा प्रायजसो राजनीतिक दलहरुले सरकारमा पुगेपछि यो भत्ता बढाइदिने दाबी गर्ने गर्छन् ।

तर, राज्यको ढुकुटीमा पैसा भए त बढाउनु नि । अहिले यँही भत्ता दिन पनि सरकारलाई हम्मेहम्मे परिसक्यो । त्यसकारण अब सरकारले सामाजिक सुरक्षा भत्ता दिनमा रोक लगाउनुपर्छ । साथै, हामी नागरिकले पनि देशै धितो राखेर विदेशीबाट ऋण लिएर दिइएको भत्ता लिन छोड्नुपर्छ । मुलुक आर्थिक संकटमा छ । बजार मन्दीमा छ ।

मानिसहरुले पाँच सय र हजारको नोट भटाभट लुकाएका छन् । बजारमा लगानी गर्न कोही चाहदैंनन् । किनकि जुनसुकै क्षेत्र जोखिमपूर्ण मात्र छ । फेरि लगानी गरिएन भने कसरी राजस्व उठ्छ ? कसरी रोजगारी सिर्जना हुन्छ ? कसरी बजार चलायमान हुन्छ ? बजारमा हाल देखिएको मन्दी हटाउन सरकारले पाँच सय र हजारको नोटमा तत्काल प्रतिबन्ध लगाउन आवश्यक छ ।

यो नोटको प्रयोग बन्द गरी दुई सय वा दुई हजारको नयाँ नोट निकाल्नुपर्छ । यसो गरेमा अहिले लुकाइएको सबै पैसा बाहिरिनेछ । बजारलाई मन्दीबाट हटाउन पैसा चलायमान हुन आवश्यक हुन्छ । तर, बजारमा पैसा नै नभएपछि कसरी मन्दी हट्छ । फेरि सरकार पनि बजारलाई पहिल्यैकै अवस्थामा फर्काउन कुनै ठोस निर्णय गर्न सक्दैन ।

त्यसैले, अब सरकारले ठोस निर्णय गर्नैपर्छ । देश र जनता दुवैको हितका लागि निर्णय गर्नुपर्छ । नाकि सीमित व्यापारी, व्यवसायी वा दलालका लागि । क्याबिनेट बैठकको महत्त्व नै देश र जनताका लागि निर्णय वा काम गर्नु हो । विडम्बना, हामी कहाँ पछिल्लो समय क्याबिनेट बैठक त बसिन्छ तर दलालहरुको हितका लागि काम गरिन्छ ।

अध्ययनको बहानामा नेपाली युवाहरु अमेरिका, अस्ट्रेलिया, क्यानडालगायत मुलुकहरु विदेशिने क्रम वर्षेनी बढ्दो छ । यी देश जानकै लागि एउटै विद्यार्थीले दश लाखदेखि करोडौसम्म खर्चिएको पाइन्छ । फेरि त्यहाँ पुगेर पीआर लिएपछि उनीहरु नेपाल फर्किदैंनन् । उल्टै यहाँ भएको आफ्नो पुर्ख्यौली सम्पत्ति पनि बेचेर लग्छन् ।

त्यसैले, अब सरकारले नेपाली नागरिकता त्यागेपछि नेपालमा भएको उनीहरुको सम्पत्ति राष्ट्रियकरण हुने निर्णय गर्नुपर्छ । यसो गरेमा सरकारलाई धेरै फाइदा हुने छ । अहिले त आफ्नो मुलुकमा प्लसटु अध्ययन गरिन्छ । अनि यहाँकै शिक्षामाथि औँला उठाउँदै गुणस्तरीय शिक्षाका नाममा विकसित मुलुक पलायन हुने गरिन्छ ।

त्यहाँ पुगेपछि नेपालकै बारेमा नानाथरी भनिन्छ । नेपाल विकसित नभएको भन्दै सामाजिक सञ्जालमार्फत गालीगलौज गरिन्छ । आफुहरुजस्ता युवाहरु लाखौं खर्चिएर मुलुक छोडेर विदेश पलायन हुने अनि सामाजिक सञ्जालमार्फत चाँहि देश विकास भएन भन्दै कराउने ! जो व्यक्तिले आफ्नै मातृभूमिलाई कहिल्यै हेरेन, उसैले देश विकास भएन भनेर कराएको सुहाउँछ ?

उनीहरुले चाँहि देशका लागि के गरे र ? त्यसैले, अब सरकारले आफ्नो मातृभूमि त्याग्नेलाई उनीहरुको पुर्ख्यौली सम्पत्तिबाट पनि वञ्चित गराउन आवश्यक छ । उता, भारत र चीनले कब्जा गरेको नेपाली भूभाग फिर्ता ल्याउन सुरक्षाकर्मी खटाउनुपर्छ । घर तथा निजी सवारीसाधनलाई पनि घरेलु तथा कम्पनीमा दर्ता गरी पञ्जीकरण गर्नुपर्छ व्यवस्था गर्नुपर्छ ।

यसमा गरिएको लगानी र आम्दानीको कर उठाउनुपर्छ । बजारमा दर्ताबिनै व्यवसाय सञ्चालन भएका छन् । त्यसलाई अनुगमन गरी करको दायरामा ल्याउनुपर्छ । सरकारले निर्माण व्यवसायी, दुग्ध-उखु किसान र कोरोना महामारीका समयमा बीमा गराएका अस्पतालहरुको अर्बौं रकम भुक्तानी गर्न सकेको छैन ।

किनकि राज्यको ढुकुटीमा राजस्व उठिरहेको छैन । अहिले सरकारी खर्च धान्न सरकार विदेशीसँग ऋण लिइरहेको छ । विदेशी ऋण २७ खर्ब पुगिसक्यो । अझै पनि सरकारी खर्च कटौती नगरिए र राजस्व उठाउन नसके यो ऋण एक वर्षकै दोब्बर हुने छ । यसैले, अब सरकारले विदेशी ऋण लिने होइन, खर्च कटौती गर्ने र राजस्व उठाउने हो । यसका लागि सरकारले तत्काल आवश्यक कदम नचाले भविष्यमा ठुलो क्षति व्यहोर्नुपर्ने छ ।

# बहाल कर तिर्न उपप्रमुखको आग्रह

मध्यपुर थिमि नगरपालिकाले आर्थिक वर्ष २०८१-८२ देखि लागुहुने गरि बहाल करमा ५% छुट सुविधा लागू गरेको छ । जस अनुसार आवासिय रुपमा घरभाडामा लगाएका घरधनिहरुलाई लक्षित गरि छुट सुविधा अगाडि बढाएको मध्यपुर थिमि नगरपालिकाको उपप्रमुख विजय कृष्ण श्रेष्ठले जानकारी गराए ।

अहिले आवासिय रुपमा घर भाडामा लगाएका घरधनीहरुले घर बहाल कर कम मात्रै बुझाएका छन् । जसले गर्दा आम्दानीको स्रोत देखाउन नसक्ने, घरभाडामा बस्ने ब्यक्तिले गैह्र कानुनी काम गरे घरधनी समस्यामा पर्ने, भाडा नबुझाए भाडा उठाउन कानुनीरुपमा समस्यामा पर्ने जस्ता धेरै समस्याहरु हुने अवस्था रहेको तर करको दर १०% हुँदा तिर्न नसकिरहेको अवस्थालाई मध्यनजर गर्दै यो वर्ष देखि करको दर १०% वाट घटाएर ५% मात्रै कायम गर्दा करको भार कम हुने भएकोले नगरवासीहरु यो योजनामा जोडिने र आफ्नो आम्दानीको प्रमाणिकरणमा सहयोग मिल्ने विश्वास ब्यक्त गरे ।

घरभाडा कर किन तिर्ने त ?

१. आम्दानिको स्रोत प्रमाणित गर्न

२. भाडामा रहेका ब्यक्तिहरुको पहिचान गर्न ।

३. भाडामा राख्दा पहिचानको कारण हुनसक्ने सम्भावित खतरावाट जोगिन ।



४. कर नगरपालिकाको प्रमुख आम्दानी हो । शिक्षा, स्वास्थ्य, विकास निर्माण जस्ता कार्य अगाडि वढाउन ।

५. नगरपालिकाको विकास, सेवा सुविधामा वृद्धि गर्न ।

कर तिरौं असल नागरिकको कर्तव्य निर्वाह गरौं ।

# ल्वाङ्ग खानुको स्वास्थ्य लाभ



एजेन्सी । हाम्रो भान्सामा धेरै मसलाहरू प्रयोग गरिन्छ । यी मसलाहरूले खानाको स्वाद मात्र बढाउँदैन स्वास्थ्यमा पनि फाइदा पुऱ्याउँछ । यी मसलाहरू मध्ये एक हो, ल्वाङ्ग जुन सामान्यतया गरम मसलाको रूपमा प्रयोग गरिन्छ । यसको विशेष स्वाद र सुगन्धको कारण, ल्वाङ्ग धेरै व्यंजनहरूमा प्रयोग गरिन्छ । तर, स्वादसँगै यो स्वास्थ्यका लागि पनि निकै फाइदाजनक हुन्छ । विशेषगरी चिसो मौसममा ल्वाङ्गलाई खानपानमा समावेश गरिन्छ ।

दैनिक खाली पेटमा ल्वाङ्ग खाँदा धेरै स्वास्थ्य लाभ हुन्छ । ल्वाङ्ग नियमित रूपमा चपाउँदा यसको शक्तिशाली औषधीय गुणका कारण विभिन्न प्रकारका स्वास्थ्य लाभहरू प्राप्त गर्न सकिन्छ । आज यस लेखमा हामी तपाईलाई दिनहुँ खाली पेट ल्वाङ्ग खानुका केही आश्चर्यजनक फाइदाहरूबारे बताउनेछौँ-

कलेजो स्वास्थ्य राख्छ

नियमित रूपमा खाली पेटमा ल्वाङ्ग चपाउँदा कलेजोको स्वास्थ्यमा सुधार हुन्छ । यसले कलेजोलाई डिटोक्सिफिकेसन गर्न, कलेजोको कार्यलाई सुधार गर्न र शरीरको प्राकृतिक डिटक्सिफिकेशन प्रक्रियाहरूलाई सहयोग गर्न मद्दत गर्दछ ।

मुखको स्वास्थ्य सुधार

ल्वाङ्गमा एन्टी-ब्याक्टेरियल र एन्टिसेप्टिक गुण हुन्छ, जसले तपाईंको मुखको स्वास्थ्यमा सुधार गर्छ । यसले मुखमा हुने कीटाणु र ब्याक्टेरियासँग लड्न मद्दत गर्छ ।

पाचन स्वास्थ्य सुधार

हरेक बिहान खाली पेटमा एउटा ल्वाङ्ग खाँदा पाचन शक्तिमा सुधार हुन्छ । ल्वाङ्गमा यौगिकहरू हुन्छन् जसले पाचन इन्जाइमहरूको उत्पादनलाई विनियमित गर्दछ, जसले समग्र पाचन स्वास्थ्य सुधार गर्न मद्दत गर्दछ।

रक्त धमनीको स्तर नियन्त्रण

यदि तपाई मधुमेहको रोगी हुनुहुन्छ भने हरेक बिहान खाली पेटमा ल्वाङ्ग चपाउनु तपाईको लागि निकै लाभदायक साबित हुनेछ । यो किनभने खाली पेटमा ल्वाङ्ग चपाउँदा रगतमा चिनीको स्तर स्थिर राख्न मद्दत गर्दछ, यसले मधुमेह भएका मानिसहरूका लागि फाइदाजनक बनाउँछ ।

वजन घटाउनमा सहयोगी

तौल घटाउन चाहनुहुन्छ भने बिहान खाली पेटमा ल्वाङ खानुहोस् । दिनभरि खाली पेटमा लौंग खानु दिनभरि मेटाबोलिज्मलाई गति दिनको लागि उत्तम तरिका हुन सक्छ । यसले तौल घटाउन पनि मद्दत गर्छ ।

प्रतिरक्षा शक्ति बढाउनछ

जाडोमा मौसम परिवर्तनका कारण रोग प्रतिरोधात्मक क्षमता कमजोर हुन्छ । यस्तो अवस्थामा, बिहान खाली पेटमा ल्वाङ्ग चपाउँदा तपाईंको शरीरको प्रतिरक्षा प्रणालीमा सुधार हुन्छ, जसले शरीरलाई संक्रमण र रोगहरूसँग लड्न मद्दत गर्दछ ।

# मुटु रोगीलाई रातो मासु वर्जित

काठमाडौं- मानव स्वास्थ्यका लागि केही हदसम्म मासु चाहिने तत्त्व पनि हो । तर मासु खाँदा सचेतना अपनाउन जरुरी हुने चिकित्सकहरू बताउँछन् ।

गंगालाल हृदय रोग केन्द्रमा कार्यरत मुटु रोग विशेषज्ञ डा.रविन्द्र सिम्खडा मासु शरीरका लागि चाहिने तत्त्व मासु खानै हुँदैन भन्ने नभए पनि आफ्नो स्वास्थ्य अवस्था बुझेर ठिक्क मात्रामा मासु खान सुझाव दिन्छन् ।

यदि पहिले नै मुटुसम्बन्धी कुनै रोगहरू जस्तै कोलेस्ट्रोल, हृदयाघातजस्ता समस्या भइसकेको छ र रातो मासुहरू नखानु भनेको छ रातो मासु वर्जित रहेको र खानै परे चिकित्सकको सल्लाहमा मात्रै खान उनको सुझाव छ ।

त्यस्तै माछा खानु पर्दा फ्राई नगरी पकाएर खानु राम्रो हुने भन्दै डा. सिम्खडा भन्छन- 'कुखुराको मासु पनि स्वास्थ्यका लागि लाभदायक नै हुन्छ । तर त्यसमा बोसो, चिल्लो पदार्थ घिउ, तेलको मात्रामा कमी गर्नुपर्छ ।'

चाडमा प्राय खसी बोकाको मासु धेरै प्रयोगमा आउँछ । खसीको मासु सकेसम्म कम खानुपर्छ भन्दै उनी खसीको भित्री अङ्गहरू आन्द्रा, भुँडी, कलेजोमा अधिक चिल्लोपन हुने भएकाले यसले स्वास्थ्यमा बेफाइदा गर्ने भएकाले नखान सल्लाह दिन्छन् ।

वर्षभरि कुर्सीमा बसेर काम गर्नुपर्ने कर्मचारीका लागि घरपरिवारसंग मिलेर रमाउने, घुम्न जाने, राम्रो अवसर भएर घुमघाममा रमाउन उनी सल्लाह दिन्छन् ।

मासु खानै हुँदैन भन्ने छैन । तर ठिक्क मात्रामा खान र मासुसंगै मदिरा नखान उनको सुझाव छ । धेरै मोटो व्यक्ति, मुटु रोगी, ब्लड प्रेसरका बिरामी, मधुमेहको उपचार गराइरहेका बिरामीहरूले मासु कम खाने, कोलेस्ट्रोलका बिरामीहरूले रातो मासु नखानु नै राम्रो हुने उनले बताए ।

चाडबाड भन्ने बित्तिकै टन्न माछा मासु, चिल्लो, पिरो, मदिरा, चिसो पेय पदार्थहरू लगायत अनेक थरिका खानेकुराहरू खाने र शारीरिक व्यायामहरू कम हुने हुँदा विभिन्न समस्याहरू लिएर जँचाउन आउनेको भीड लाग्ने गरेको अनुभव डा. लम्सालले सुनाए ।

'दशैं सकिएपछि छाती दुखेको, मुटु दुखेको, रक्तचाप, मधुमेह बढेको लगायतका समस्याहरू लिएर धेरै बिरामी आउने गर्दछन् । त्यसैले यी सबै समस्याहरूबाट बच्न सकेसम्म मासु नखाने खाइहाले पनि ठिक्क मात्रामा खाने र नियमित व्यायाम आवश्यक छ ।' सुझाव दिँदै उनले भने ।

# अन्नको सम्मान गर्ने पर्व सकिमना पुन्ही



अन्नको सम्मान गर्ने पर्वको रुपमा रहेको सकिमना पुन्ही सम्पन्न भएको छ। नेपाल भाषामा सकिको अर्थ पिडालु र मनाको अर्थ उसिन्नु हो भने पुन्ही भनेको पूर्णिमा हो। यस अर्थमा सकिमना पुन्हीको दिन पिडालुलगायतका जमिन भित्र फल्ने कन्दमुल उसिनेर खाने पूर्णिमा भन्ने हुन्छ।

ऋतु अनुसारको उत्पादनलाई चाडपर्वमा रुपान्तरण गर्दै मनाउन सिपालु नेवार समुदाय कार्तिक शुक्ल पूर्णिमाको दिन घरघरमा पिँडालु र सखर खण्ड उसिनेर खाँदै सकिमना पुन्ही मनाउने गर्दछन । सकिमना पुन्ही विशेष गरेर नेवार समुदायमा रहेको भजन खलः, दाफा भजन खलःहरुले विशेष पर्वको रुपमा मनाईन्छ। यस दिन गत कोजाग्रत पूर्णिमाको दिन शुरु गरेको एक महिने रात्रीकालिन भजन किर्तनलाई समापन गर्ने दिनको रुपमा पिँडालु उसिनेर खाने, नसाः (मकै, भटमास, पिँडालु, गहुँलगायतका अन्न)बाट भगवानका आकृति बनाउने र त्यसैलाई प्रसादको रुपमा बाँडेर खाने प्रचलन रहेको छ ।





यसदिन नेवार समुदायमा आ-आफ्नो टोल टोलमा रहेका दाफा भजन खलःले नसाःबाट आ-आफ्नो टोलमा भएका मठमन्दिर तथा भगवानको आकृति बनाउँछन । आकृति बनाउँदा गहुँ विछ्याएर ताय (धानको लावा) र कालो भटमासले भगवानको स्वरुप बनाउँछ । त्यसलाई चारैतिर भुटेको मकैले घेरा बनाउँछ । त्यसमाथि पुरी र माल्पुवाले घेरेर फुलको मालाले श्रृगार पटार गरी दक्षिणा चढाई दियो बालेर भजन किर्तन गाउने गर्छ ।

कोजाग्रत पूर्णिमाको दिनदेखि दैनिक रुपमा हुने भजन किर्तन समापन हुने भएकोले नेवार समुदायमा आजको दिन ब्रत बसी विभिन्न ठाउँमा रहेका चार नारायण र महादेव मन्दिरमा गई पुजा चढाउँने प्रचलन पनि रहेको छ । पुजामा माल्पुवा, पुरी, नसा, गाईको दुधले बनेको खिर, सुन्तला, बदाम, उसिनेको पिँडालु र सखर खण्ड आफ्ना टोलमा भएका देवीदेवता, महादेव र नारायण देवतालाई प्रसादको रुपमा चढाउँछन् ।

यसरी पुजा चढाउँदा प्रसादका रुपमा मन्दिरबाट नसाः लिएर आउने गर्छ । साँझ चन्द्रमा उदायपछि चन्द्रमा र तुल्सीलाई गाईको दुध अर्घ्य दिई प्रसाद चढाएर पूजा सम्पन्न गरिन्छ । मन्दिरबाट ल्याएको प्रसाद स्वरुप नसा राखेर घरका सबै सदस्यलाई पिँडालु, सखरखण्ड, माल्पुवा र पुरी प्रसाद दिई आशिष लिएर भोजन गर्ने परम्परा रहको छ ।

ऋतु अनुसारको भोजन भगवानलाई प्रसादको रुपमा चढाएर मात्र खाने पर्वको रुपमा सकिमना पुन्हीलाई लिने गरिन्छ । पुन्हीको दिन विषेशगरी नारायणको पुजाआराधना गरिने हुनाले नेपाल सम्वतको बाह्र महिनाको पहिलो पुन्हीमा भगवान् नारायण, लगायत महादेव र आफ्नो इष्टदेवतालाई प्रसाद चढाएर खानाले पुण्य प्राप्तीका साथै शारीरिक शक्ति प्राप्त हुने धार्मिक विश्वास छ ।

वर्षभरीको बाह्रवटा महिनाको प्रत्येक पुन्हीमा भगवानलाई फरक फरक भोजन प्रसादको रुपमा चढाइने नेवार समुदायको संस्कार र संस्कृति अनुसार कार्तिक शुक्ल पुन्हीको दिन कण्डमुल, खिर र नसाःलाई प्रसादको रुपमा भगवानलाई चढाइने संस्कृतिकर्मीहरु बताउँछन् ।

नेवार समुदायले ऋतु अनुसारको उब्जनी भएका अन्न पहिला आफ्नो ईष्ट देवलाई चढाएर मात्र खाने प्रचलन अनुसार आजको दिन पिँडालु, सखर खण्ड, नसाः लगायतका भोजन प्रसादको रुपमा चढाएर खाने प्रचलन रहेको इतिहास तथा संस्कृतिविद प्रा.डा पुरुषोत्तमलोचन श्रेष्ठले बताउनुभयो । यसले शरिरमा ताकत दिनुका साथै शरिर स्वस्थ्य हुने जनविश्वास रहेको उहाँको कथन छ ।

अन्नपातबाट बनाएको भगवानको आकृतिबाटै मठमन्दिर तथा भगवानको मुर्तिको विकास भएको पुरोहित एवं संस्कृतिकर्मी हरिशरण राजोपाध्यायले बताउनुभयो । पुरोहित राजोपाध्ययका अनुसार आदिमकालमा मानिसले अन्नपात उत्पादन गर्न नजानेको समयमा कण्डमुललाई सबै भन्दा पहिलो भोजनको रुपमा ग्रहण गरेका थिए। त्यसपछि अन्नपात उब्जनी गर्न थाल्यो । त्यतीबेलासम्म नेपालको कुनै पनि ठाउँमा भगवानको मठमन्दिरको विकास भएको थिएन । उहाँले भन्नुभयो, 'पछि मानिसले त्यही अन्नबाट विभिन्न मठमन्दिर र भगवानको आकृति कोरेपछि बिस्तारै यसको विकसित रुप विभिन्न मठमन्दिरहरुको निर्माण हुन थाल्यो । त्यसको स्वरुप सकिमना पुन्हीका दिन नसाःमा भगवानको आकृति बनाएर त्यसलाई पुजा गरी कण्डमुललाई प्रसादका रुपमा चढाएर खाने प्रचलन थालेको हो ।'

नेवार समुदायमा नसालाई सकिमना पुन्हीको दिनमा मात्र नभई गणेश चतुर्थीका दिनमा पनि प्रसादको रुपमा चढाई विधिवत रुपमा पुजा गर्ने परम्परा रहेको छ । साथै गुफा राख्दा गुफा बसेका बालिकाहरुलाई सुर्यसँग विवाह गर्ने क्रममा पनि प्रसाद स्वरुप नसाः खुवाउन जाने परम्परा रहेको छ । त्यसैगरी नेवार समुदायको जन्म दिनको अवसरमा पनि भुटेको मकै, गहुँ, भटमास लगायतको समिश्रण नसाः दान गर्ने प्रचलन रहेको छ ।

# एनपिएल – लिग चरणको खेल तालिका सार्वजनिक

काठमाडौं । पहिलो संस्करणको सिद्धार्थ बैंक नेपाल प्रिमियर लिग( एनपिएल) को खेल तालिका सोमवार सार्वजनिक भएको छ । नेपाल क्रिकेट संघ(क्यान) ले जारी गरेको खेलतालिकाको लिग चरणका खेलहरु पुस १ गते सम्म हुनेछ । लिग चरणमा कुल २८ खेल हुनेछ ।

लिग चरणका खेल १७ दिनमा सकिनेछ । लिग चरणमा दुई दिन विश्राम, दुई दिन एउटा खेल र बाँकी दिन २ खेल हुनेछन् । लिग चरणपछि एलिमिनेटर, क्वालिफायर १ र २ तथा पुस ६ गते फाइनल हुनेछ। एनपिएलमा कुल ३२ खेल हुनेछन्।

लिग मसिर १५ बाट सुरु हुनेछ । लिगको चरणको खेल तालिका नेपाली मितीमा यसप्रकार छ :

मसिर १५ गते शनिवार - विराटनगर किङ्सविरुद्ध जनकपुर बोल्ट्स मध्यान्ह १२:१५ बजे
मसिर १६ गते आइतबार - विश्राम
मसिर १७ गते सोमवार - काठमाडौं गुर्खाज विरुद्ध चितवन राइनोज विहान ९:१५ बजे
-जनकपुर बोल्ट्सविरुद्ध कर्णाली याक्स दिउँसो १:१५ बजे
मसिर १८ गते मंगलवार - सुदूरपश्चिम रोयल्सविरुद्ध विराटनगर किङ्स विहान ९:१५ बजे
-चितवन राइनोजविरुद्ध पोखरा एभेन्जर्स दिउँसो १:१५ बजे
मसिर १९ गते बुधवार - कर्णाली याक्सविरुद्ध काठमाडौं गुर्खाज विहान ९:१५ बजे
-विराटनगर किङ्सविरुद्ध लुम्बिनी दिउँसो १:१५ बजे
मसिर २० गते बिहीवार - पोखरा एभेन्जर्सविरुद्ध जनकपुर बोल्ट्स विहान ९:१५ बजे
-काठमाडौं गुर्खाजविरुद्ध सुदुरपश्चिम रोयल्स दिउँसो १:१५बजे
मंसिर २१ गते शुक्रवार - कर्णाली याक्सविरुद्ध चितवन राइनोज विहान ९:१५ बजे
-लुम्बिनी लायन्सविरुद्ध पोखरा एभेन्जर्स दिउसो १:१५ बजे
मसिर २२ गते शनिवार - लुम्बिनी लायन्सविरुद्ध सुदुरपश्चिम विहान ९:१५ बजे
-कर्णाली याक्सविरुद्ध विराटनगर किङ्स दिउसो १:१५ बजे
मसिर २३ गते आइतवार - जनकपुर बोल्ट्सविरुद्ध लुम्बिनी लायन्स विहान ९:१५ बजे
-सुदुरपश्चिम रोयल्सविरुद्ध चितवन राइनोज दिउँसो १:१५ बजे
मसिर २५ गते मंगलवार - चितवन राइनोजविरुद्ध लुम्बिनी लायन्स विहान ९:१५ बजे
-कर्णाली याक्सविरुद्ध पोखरा एभेन्जर्स दिउँसो १:१५ बजे
मसिर २६ गते बुधवार - जनकपुर बोल्ट्सविरुद्ध सुदुरपश्चिम रोयल्स विहान ९:१५ बजे
-काठमाडौं गुर्खाजविरुद्ध लुम्बिनी लायन्स दिउँसो १:१५ बजे
मसिर २७ गते बिहीवार - पोखरा एभेन्जर्सविरुद्ध विराटनगर किङ्स विहान ९:१५ बजे
-जनकपुर बोल्ट्सविरुद्ध काठमाडौं गुर्खाज दिउँसो १:१५ बजे
मसिर २८ गते शुक्रवार - लुम्बिनी लायन्सविरुद्ध कर्णाली याक्स विहान ९:१५ बजे
-विराटनगर किङ्सविरुद्ध चितवन राइनोज दिउँसो १:१५ बजे
मसिर २९ गते शनिवार - पोखरा एभेन्जर्सविरुद्ध काठमाडौं गुर्खाज विहान ९:१५ बजे
-चितवन राइनोजविरुद्ध जनकपुर बोल्ट्स दिउँसो १:१५ बजे
मंसिर ३० गते आइतवार - विराटनगर किङ्सविरुद्ध काठमाडौं गुर्खाज विहान ९:१५ बजे
-पोखरा एभेन्जर्सविरुद्ध सुदुरपश्चिम रोयल्स दिउसो १:१५ बजे
पुस १ गते सोमवार -सुदुरपश्चिम रोयल्सविरुद्ध कर्णाली याक्स विहान ९:१५ बजे

# नेपाल यु-१९ महिला विश्वकपमा छनोट

काठमाडौं : नेपाल आगामी वर्ष हुने आईसीसी यु-१९ टी-२० क्रिकेट विश्वकपमा छनोट भएको छ । बुधवार भएको निर्णायक खेलमा युएईलाई ८ विकेटले हराउँदै नेपाल पहिलोपटक यु-१९ महिला विश्वकपमा छनोट भएको हो ।

युएईले दिएको ८४ रनको लक्ष्य नेपालले १४.४ ओभरमा २ विकेट गुमाएर पूरा गर्दै पहिलो पटक विश्व कपमा स्थान बनाएको हो । सन् २०२३ मा भएको विश्वकपमा नेपालले छनोट चरण पार गर्न सकेको थिएन ।

नेपालको जितमा ओपनर साना प्रविनले ४२ बलमा सर्वाधिक नट आउट ३५ तथा कप्तान पुजा महतोले १८ बलमा ४ चौकाको सहयोगमा १८ रन जोडिन् । ओपनर सावित्री धामीले ९ बलमा १२ तथा सोनी पाखीनले १९ बलमा नट आउट १३ रन जोडिन् ।

त्यसअघि टस हारेर ब्याटिङको निम्तो पाएको घरेलु टोलीले निर्धारित २० ओभरमा ९ विकेट गुमाएर ८३ रनको योगफल तयार गरेको थियो । नेपालले विश्वकपमा छनोट हुन यो लक्ष्य १६.२ ओभरमा पूरा गर्ने पुग्ने समिकरण रहेको थियो ।

युएईका लागि कप्तान समाइरा धारनीधार्काले ४८ बलमा सर्वाधिक ३१ , रिनिथा रजिथले १८ बलमा २० तथा इन्दुजा नन्दकुमारी र लाभन्या केन्याले समान १० रन जोडिन् । एक समय ५९ रनमा २ विकेट गुमाएर बलियो स्थितीमा रहेको युएईले २४ रन जोड्दा ७ विकेट गुमायो ।

नेपालका लागि कृष्मा गुरुङले ४, रिया शर्मा र सिमाना केसीले समान २ तथा रचना चौधरीले १ विकेट लिए । कप्तान पुजा महतोले ४ ओभरमा मात्र ११ रन खर्चेर उत्कृष्ट बलिङ गरिन् ।

नेपालले ६ खेलबाट १० अंक जोडयो। युएईले पनि समान खेलबाट समान अंक जोडे पनि नेपाल नेट रनरेटमा अगाडि रहँदै विश्वकपमा स्थान बनाउन सफल भएको हो।

यु-१९ टि-२० विश्वकप आगामी वर्षको १८ जनवरी देखि २ फेब्रुअरी सम्म मलेसियामा आयोजना हुँदैछ । नेपाल विश्वकपमा समुह 'डी' मा अस्ट्रेलिया, बंगलादेश र स्कटल्याण्डसँगै रहेको छ । विश्वकपमा नेपालको पहिलो खेल १८ जनवरीमा बंगलादेशविरुद्ध रहेको छ ।

**भक्तपुरमा....**

फोटो पुस्तक प्रदर्शनको तयारी गरेको पनि उनले बताए । २०७६ सालमा कोभिडका कारण स्थगित भएको भक्तपुर महोत्सवलाई यो वर्ष भव्य रूपमा सञ्चालन गर्ने उनी बताउँछन् ।

भक्तपुर नगरपालिकाले समय समयमा ठूला र साना महोत्सवहरूको आयोजना गर्दै आएको छ । २०५४ साल कात्तिक ६ गतेदेखि १० गतेसम्म पाँच दिनको 'भक्तपुर महोत्सव' र २०६९ साल असोज ६ गते एक दिने 'भक्तपुर सडक महोत्सव २०६९' त्यस्तै, २०७६ पुस १६ गते 'सन्ध्याकालीन सांस्कृतिक सम्पदा पदयात्रा तथा स्थानीय उत्पादन प्रदर्शन', २०७९ चैत १८ र १९ गते 'सम्पदा पदयात्रा तथा स्थानीय उत्पादन तथा घरेलु मेला' आयोजना गरेको जनाएको छ । २०८० साउन २० गते 'भक्तपुरका पोखरीहरूको पदयात्रा मेला' र २०८० पुस १४ गते 'बहाबही पदयात्राका साथ योमरी उत्सव' सफलतापूर्वक सम्पन्न गरेको छ । जसमा नगरवासीको पनि उत्तिकै सहभागिता रहेको थियो ।

नगरपालिकाकै आयोजनामा २०५६ सालमा 'युनेस्को कल्चर हेरिटेज म्यानेजमेन्ट एन्ड टुरिजम' विषयक अन्तर्राष्ट्रिय सम्मेलन भएको थियो । 'महोत्सव नगरपालिकाले आयोजना गरे पनि नगरका सबैको सक्रिय सहभागिता रहने,' यहाँका महोत्सवहरू जीवन्त रहेका छन् ।' महोत्सवको बेलामा सर्वसाधारण देखाएको उत्साह र उमङ्गले नगर झन् जीवन्त देखिने उनले सुनाए ।

भक्तपुरको कला, संस्कृति, सम्पदा र यहाँको मौलिक उत्पादन तथा जीवनशैलीबारे स्वदेशी र विदेशी पाहुनाहरूलाई जानकारी गराउँदै भक्तपुरलाई पर्यटकीय गन्तव्यस्थलका रूपमा विकास गरी पर्यटन उद्योगमार्फत नगरको आर्थिक गतिविधि वृद्धि गर्दै नगर र नगरवासीको आर्थिक विकासमा योगदान पुऱ्याउने महोत्सवको प्रमुख उद्देश्य रहेको छ। महोत्सवका अन्य उद्देश्यहरूमा यहाँका नाचगान, बाजागाजा, हस्तकला, घरेलु उद्योग, सिप, कला, संस्कृतिको प्रवर्धन गरी यसलाई आर्थिक गतिविधिसँग जोड्न आवश्यक वातावरण तयार गर्ने रहेको छ । भक्तपुरका मौलिक खाद्य सामग्री, संस्कार र जीवनशैलीबारे प्रचारप्रसार गरी यसको व्यवसायीकरणका लागि आवश्यक सहजीकरण गर्ने पनि रहेको छ ।

भक्तपुरमा हरेक दिन कुनै न कुनै सांस्कृतिक कार्यक्रम भइरहेको हुन्छ । नगरका विभिन्न टोलमा कार्यक्रमहरू आयोजना गरी सिङ्गो नगरलाई नै उत्सवमय बनाउने नगरपालिकाको प्रयास छ । प्रत्येक दबली चोकहरूमा विभिन्न कार्यक्रम आयोजना हुने र तिनबारे मोबाइल एप्समार्फत सटिक जानकारी दिने प्रयाससमेत नगरपालिकाले गरेको छ । आगन्तुकले ब्रोसर तथा मोबाइल एप्समार्फत कुन टोल र चोकमा कुन कार्यक्रम हुँदै छ भन्ने जानकारी लिन सक्ने र त्यहीअनुसारको आफ्नो पदयात्रा तय गर्न सक्ने नगरपालिकाले जनाएको छ ।

यसपटकको महोत्सवमा बाँसुरी बाजा प्रतियोगिता, भजन, नौबाजा, नगरा वादन, परम्परागत र आधुनिक सांस्कृतिक नाच देखाइने आयोजकले बताएका छन् । त्यसैगरी पौभा, तस्विर, चित्रकला, छवालीकला, परम्परागत पोसाकको प्रदर्शन गरिने छ । हलिमली, योमरी, परम्परागत वाद्यवादन सामग्री, घरेलु उत्पादन, परम्परागत धागो रंग्याउने, कुमारी (जीवित देवी), दिपङ्कर बुद्ध, नवदुर्गा, शैक्षिक, मृत्तिका कला प्रस्तुत गरिने छन् । परम्परागत खेलकुद, नेवार जीवनशैली, नौ बाजा, बौद्ध प्रकाशन, सहकारी गतिविधि, कृषि उत्पादन, पुस्तक, बुद्ध अस्तु, खेलकुद, परम्परागत तोरीको तेल उत्पादन विधि, सांस्कृतिक जात्रा पर्वको नमुना देखाइने छन् । महोत्सवमा खाना महोत्सव, व्यापार मेला, दही महोत्सवः नौका विहार, वाटर साइक्लिङ, बाल मनोरञ्जनात्मक गतिविधि, खेलकुद हुने छन् ।

भक्तपुर महोत्सवलाई व्यवस्थित र भव्यताका साथ सञ्चालन गर्न नगरपालिकाका सम्पूर्ण जनप्रतिनिधिहरू, जिल्लास्थित सम्पूर्ण कार्यालय प्रमुखहरू, निजी क्षेत्रका संघसंस्थाका प्रतिनिधिहरू र अन्य सरोकारवालाहरूको सहभागितामा १६१ सदस्यीय मूल समारोह समिति, २५ सदस्यीय निर्देशक समिति, विभिन्न १३ वटा विषयगत समिति र एक सचिवालय समिति गठन गरिएको नगरपालिकाले जनाएको छ ।

भक्तपुरको मौलिक सांस्कृतिक पहिचानलाई सम्मान गर्दै सन् १९७९ मा युनेस्कोले भक्तपुरको दरबार क्षेत्रलगायतका सम्पदा क्षेत्रलाई विश्व सम्पदामा सूचीकृत गरेको हो । भक्तपुर नगर भक्तपुर जिल्लाको प्रशासनिक केन्द्र मात्र नभई नेपालकै ऐतिहासिक र सांस्कृतिक केन्द्रका रूपमा समेत परिचित छ ।

यहाँका शताब्दी पुराना मठमन्दिर, बहाबही, देवालय, शिवालय, पीठ, चोछें, दरबार, सत्तल, पाटी पौवा र ढुंगेधारा विश्वस्तरकै वास्तुकलाका नमुना हुन् । नगरपालिकाले पुर्खाले सिर्जेका ती अमूल्य सम्पदाहरूको संरक्षण, प्रवर्धन र सदुपयोग गर्दै भक्तपुरमा पर्यटन उद्योगको आधार तयार पारिरहेको छ । कला, संस्कृति र सम्पदा मानव सभ्यताको सिलसिला हो । ऐतिहासिक र सांस्कृतिक सम्पदाहरूको महत्व र यसको सदुपयोगबारे जनचेतना अभिवृद्धि गर्दै यसको संरक्षण र संवर्धनमा नगरपालिकाले जनपरिचालन गर्दै आएको छ । नयाँ पुस्तालाई भक्तपुरको मौलिकतासँग परिचित गराउँदै यसको महत्व बुझाउन नगरका कक्षा एकदेखि आठसम्मका विद्यार्थीका लागि स्थानीय पाठ्यक्रम तयार गरेको छ । 'पुर्खाले सिर्जेको सम्पत्ति हाम्रो कला र संस्कृति' नारालाई आत्मसात् गर्दै यहाँका मूर्त र अमूर्त सम्पदामा आधारित पर्यटन उद्योगको विकास गरी सहरको आर्थिक विकासमा सहयोग पुगेको जनाएको छ ।

पाँच छाना भएको (ड्यातापोल) मन्दिर, भैरवनाथ मन्दिर, सिद्ध पोखरी, लक्ष्मीनर सिंह मन्दिर, न्ह:पुखु (रानी पोखरी), भाजु पुखु, चतुर्ब्रह्म महाविहार, झौरबहि, बेताल मन्दिर, इन्द्रायणी चोछें, छुमा गणेश चोछेंलगायत टोल-टोलका पाटी, सत्तल, मठ, ढुंगेधारा, इनार, पोखरी, बहाबहीसहित सयौं सम्पदा जिर्णोद्धार र पुनर्निर्माण सम्पन्न गरेको छ ।

भक्तपुर नगरपालिकाले पर्यटन उद्योगका लागि आवश्यक दक्ष जनशक्ति उत्पादन गर्न विदेशी भाषा तालिम, कम्प्युटर र पाक शिक्षालगायतका सिपमूलक तालिम नियमित सञ्चालन गर्दै आइरहेको छ । स्थानीय पथ प्रदर्शकहरूलाई तालिम दिई परिचालन समितिमार्फत पथप्रदर्शकहरूलाई अनुशासित र मर्यादित गरी भक्तपुरको पर्यटन उद्योगलाई व्यवस्थित गर्दै आएको छ । बहुआयामिक भक्तपुरको नमुना झलक हेर्ने हो भने यो महोत्सव सबैभन्दा उत्तम अवसर हुने नगरपालिकाको बुझाइ छ । 'त्यसो त भक्तपुर महोत्सवजस्तै हो,' नगरप्रमुख सुनिल प्रजापति भन्छन्, 'यो महोत्सवमा सिङ्गो सहरलाई एकै पटक निश्चित थलोमा देखाउने प्रयास गरिएको छ ।'

यसै गरी भक्तपुर नगरपालिकासँगै जोडिएर रहेको अर्को साँस्कृतिक शहरको रुपमा रहेको र नेवाः बस्ती रहेको मध्यपुर थिमि नगरपालिकामा पनि अर्को महोत्सव मध्यपुर महोत्सवको आयोजना हुने भएको छ । नगरपालिकाले यही पौष १२, १३ र १४ गते आयोजन गने जनाएको छ । सो महोत्सव सफल पार्नको लागि मध्यपुर थिमि नगरपालिकामा रहेको तत्कालिन पाँचवटा क्षेत्रगत स्थलहरु जसमा बालकुमारी, चपाचो, नगदेश, बोदे र दिव्यश्वरीमा क्षेत्रगत समिति निर्माण गरि सकेको छ ।

**दलको.....**

गरिएको छ ।

तालमेलको रमाइलो पक्ष केछ भने पुथा उत्तरगंगामा एमाले उम्मेदवार केशकुमारी तुलाचनलाई कांग्रेसले सघाउने छ । एमाले जिल्ला कमिटी उपसचिव एवम् अनेमसंघ केन्द्रीय सदस्यसमेत रहेका उनी चुनाव भने कांग्रेसको चुनाव चिह्न रुखबाट लड्ने भएकी छिन् ।

दुई दलले माओवादीको गढ जसरी पनि भत्काउने योजनासहित उम्मेदवार एमालेको तर चुनाव चिह्न भने कांग्रेसको हुने सहमति आइतबार गरेर मनोनयन पनि गरिसकेका छन् । दुई दलले उक्त गाउँपालिकाको वडा नम्बर २ को अध्यक्षमा एमाले जिल्ला कमिटी सदस्य जीवन रोका उठाउने निर्णय गरेका छन् । एमाले उम्मेदवारलाई कांग्रेसले साथ दिने छ ।

दुई ठूला दल नमिलेसम्म माओवादीलाई हराउन नसकिने निष्कर्षसहित यो सहमति भएको हो। उक्त गाउँपालिकाकी उपाध्यक्ष भूपेन्द्रा बुढा र वडा नम्बर २ का अध्यक्ष जसबहादुर श्रीपालीको एकै सवारी दुर्घटनामा ज्यान गएको थियो । उनीहरू दुवैजना माओवादीबाट २०७९ मा विजयी भएका जनप्रतिनिधि थिए । गत भदौ २८ गते बागलुङमा भएको गाउँपालिकाकै गाडी दुर्घटनामा परी उनीहरूले ज्यान गुमाएका थिए । भूपेन्द्रकी आमाको पनि रा १ भ २०० नम्बरको सरकारी गाडी दुर्घटनामा निधन भएको थियो ।

**मध्यपुर.**

उनले आजका युवाहरु भोलि स्थानीय तह र देशको नेतृत्व गर्ने वर्ग भएकाले उनीहरुलाई सामाजिक कार्यका साथै नागरि कसँग सहकार्य गराउने कार्यमा सक्रिय बनाउनु पर्नेमा जोड दिए ।

अभियान अन्तर्गत मध्यपुर महोत्सवको पूर्व तयारीका लागि युवा सञ्जाल र हरेक वडाका युवा क्लबहरुको सहभागितामा प्रत्येक शनिवार मध्यपुर थिमिका पुरातात्विक, ऐतिहासिक एवम् धार्मिक महत्वका मठमन्दिर एवम् सम्पदाहरुको सरसफाई गर्ने कार्यक्रम रहेको जानकारी गराएको छ । कार्यक्रममा सर्वसाधारण र नगर प्रहरीकोसमेत सहभागिता रहेको थियो ।

**सहकारीमा.**

हामी भन्छौं- यो प्रदेश, संघीयता चाहिँदैन तर उहाँहरूले थ्रेसहोल्डमा जोड दिनु भएको छ । थ्रेसहोल्ड पनि समस्या हो । थोरै थ्रेसहोल्ड राखेर गर्दा हुन्छ । त्यसैले संविधानभित्रैबाट संशोधन गरेर विस्तारै यी कुराहरू गर्दै जानुपर्छ । र नेतृत्वले देशलाई सुशासन गराउन सक्ने समृद्धि दिन सक्ने त्यो अहिले देखिँदैन ।

अब पुष्पकमल दाहाल, शेरबहादुर देउवा, केपी शर्मा ओली यतिका वर्ष प्रधानमन्त्री भइसक्नु भयो । अब के हुन्छ त उहाँहरूबाट । 'अब म प्रधानमन्त्री हुँ, मेरो स्वास्थ्यले साथ दिउन्जेलसम्म म र मेरा वरपरका आसेपासेहरूलाई सुरक्षित स्थान दिऊँ, बनाइदिऊँ । भोलि चुनाव जित्न शक्ति, स्रोत र पैसा सङ्कलन गरौं । चुनाव जितेर आऊँ' भन्ने उहाँहरूले अब गर्न सक्ने केही छैन । त्यसैले पुस्तान्तरण गरेर अहिलेको चुनाव हारे पनि १० वर्षपछि भए पनि फर्केर आएर राजनीति गर्न सक्छु, देश बनाउँछु भन्ने पुस्ता चाहियो ।

अहिले आएका गगन थापा, विश्वप्रकाशहरू छन् तर भोलि उनीहरू नबिग्रेलान् त भन्न सकिँदैन । नत्र के मा आस गर्ने त ? यहि पारामा जितेर आउँछन्, आफ्नो स्वार्थको लागि सत्तामा पुग्छन् । गठबन्धन गरिरहन्छन् । यसै छोड्ने हो कि सामना गरेर अगाडि बढ्ने हो त ?

अब सिस्टमबाहिरबाट त नेतृत्व कोही आउँछ । राजा आउँछ भन्दा राजाले गरेको पनि हामीले देखेका छौं । राजाले सुशासन दिने भ्रष्टाचार रोक्ने भएको भए त यस्तो हुँदै हुँदैनथ्यो ।

स्थानीय तहदेखि माथिसम्म नीतिगत भ्रष्टाचार गर्ने, मन्त्रिपरिषद्बाट नीतिगत निर्णय भन्दै करोडौं, अरबौंका ठेक्काहरू हात पारेर आफ्नो मान्छेलाई पार्ने चुनावका लागि पैसा जम्मा गर्ने काम भएको छ । अब त्यसमा सुधार गरेर जानुपऱ्यो र नेतृत्व फरक खोज्नु पऱ्यो ।

कांग्रेसका उपसभापति धनराज गुरुङले निराश पार्नुभयो । भोलि कांग्रेस पार्टीको नेतृत्वमा पुग्न सक्ने भनेको मान्छे कस्तो एक्टिभ, जता पनि कोही कांग्रेस पार्टी कार्यकर्ताको घरमा आमा बितेको ठाउँमा पुग्ने मान्छे अहिले आर्थिक अपचलनमा पर्नुभयो । अब त्यसबाट चोखिन सक्नुहुन्छ कि हुन्न ?

सहमहामन्त्री बद्री पाण्डे व्यक्तिगत रूपमा राम्रो भन्ने रिपोर्टहरू आएका छन् । तर शासकीय कुशलता भएन त्यो सिक्नु पऱ्यो उहाँले । खाली आदर्श भएर मिठो बोली बोलेर मात्र भएन । प्रदीप पौडेलमा केही गरौं भन्ने हुटहुटी छ । उहाँ पहिलो पटक मन्त्री हुनु भएकोले यसअघिको अनुभव छैन । त्यसमा कुन चिज कस्तो भन्ने थाहा छैन ।गगन थापा पहिलोचोटि स्वास्थ्यमन्त्री हुँदा विज्ञहरूको टोली बनाए । बजेट छ कि छैन यो कुरा गर्नुपर्ने रहेछ भन्ने सुनेर आफूले निर्णय गरे । उनीसँग निर्णय क्षमता छ । देशमा ०४६ सालभन्दा अगाडि कति बाटाघाटा थिए ? कति स्कुल थिए ? कति हस्पिटल थिए ? नेपाली औषधि उपचार गर्न दिल्ली जानुपर्थ्यो । गाउँ गाउँमा बाटो पुगेका छन् । यी तथ्यांकले भन्छ- हुँदै नभएको पनि होइन ।

वैदेशिक ऋणले मात्रै त्यो भएको हैन । कोही कांग्रेसका मन्त्रीहरू पैसा कमाउनतिर लागे । गिरिजाबाबुले कहिले पनि सुशासनका कुरा पढ्नु नै भएन । त्यो पार्टी विधिको शासनमा अलिकति चुकेकै हो । त्यो बेला उहाँले बौद्धिक नेतृत्व लिनु भएको भए अहिले यो अवस्था आउने थिएन होला । तर त्यति बेला लिएको उदार नीतिले नै यो देशमा एयरलायन्सहरु आएका हुन् । नेपालीले पासपोर्ट पाएर विदेश जान पाएका हुन् । बाहिर जानु नै नराम्रो भन्ने हैन । अमेरिकातिरका मानिसहरू पनि बाहिर जान्छन् । चिनियाँहरू पनि आफ्नै देशमा विकास हुँदा पनि कमाउन बाहिर गएका छन् ।

अहिलेको पुस्ताको नेतृत्वका ओलीको अलिकति बौद्धिकता त छ तर गुट बनाउने र प्याच्च बोल्ने बानी छ । प्रचण्डको जसरी पनि सत्तामा जाने । पुरानाप्रति मान्छे विरक्त भएर निराश भएर नै त्यसैको भोट राष्ट्रिय स्वतन्त्र पार्टी लगायतका स्वतन्त्र पार्टीले पाएका हुन् । तर अहिले बालेनको आफ्नै छुट्टै भिजन छ । दल खोल्लान् नखोल्लान् तर जुनसुकै हिरो भए पनि राष्ट्रपति भन्दा बाहेक अहिले हाम्रो दलीय व्यवस्थामा उहाँले भोलि के गर्नुहुन्छ थाहा छैन । हर्क साम्पाङको बौद्धिक प्रदर्शनमा खडेरी छ । रास्वपाको कुरा गर्दा यसले जति निराश कुनै पार्टीले बनाएन ।

कांग्रेस एमाले बिग्रिन ३५ वर्ष लाग्यो । उनीहरू त्यो भन्दा अगाडि त क्रान्ति गरेर आन्दोलन गरेर पञ्चायत विरुद्ध लडेर जेलनेल खाएर, दुख पाएर, जागिर खान नपाएर, सर्वस्वहरण भएर लोकतन्त्रका लागि भएका आएका हुन् । उनीहरू त आज आएर यस्तो भए भने यी रास्वपा त फौजदारी एकपछि अर्को मुद्दा लागेको, ठगीको मुद्दा लागेको र कानूनी प्रक्रियामा जाँदा पनि खाली स्टन्टबाजी गर्ने, अर्कालाई कराउने, हरेक कुरामा विवाद छ । भोलि आफ्नो कुरामा सफाइ दिने, नम्र भएर प्रस्तुत हुनु त कहाँ हो कहाँ आफैं अगाडि बढेर पहिलेकाले यसो गरेका थिए, हामीलाई यस्तो भन्ने भनेका छन् ।

गाउँ गाउँमा यी नै ठूला पार्टीका कार्यकर्ता मतदाता छन् । नेपालमा बंगलादेशको तुलना गर्नु हुँदैन । सेख हसिनाको अत्याचार धेरै थियो । नेपालमा त कांग्रेस एमालेले घर घरमा पुगेर अत्याचार त गरेका छैनन् । काम गरेनन् भन्नेमा निराशा बढेको हो । शुद्धीकरण अब दल भित्रैबाट आउनु पर्छ । अहिले नभए अर्को पुस्ताबाट आउँछ । नागरिक समाजले खबरदारी गर्दै जानु पर्छ । (पूर्वप्रशासक तथा विश्लेषक जैनेन्द्र जीवनले राखेको धारणाको सम्पादित अंश )

# भक्तपुर महोत्सबबारे प्रवचन

भक्तपुर । भक्तपुर जिल्ला बक्सिङ संघको आयोजनामा कला संस्कृतिमा युवा खेलाडीहरुको भूमिका र भक्तपुर महोत्सबबारे प्रवचन कार्यक्रम भक्तपुर नगरपालिका ७ नं वडाध्यक्ष उकेश कवाँको प्रमुख आतिथ्यतामा ड्रिमल्याण्ड किचेन एण्ड रेष्टुराँ गपलीमा सोमबार सम्पन्न भयो ।

कार्यक्रमका अतिथि कवाँले शासक दलहरुका कारण देशको परिस्थिति ठिक नभएको बताउँदै प्रमको चीन भ्रमणमा विमानस्थल निर्माणको ऋण मिनाहको लागि अनुरोध गर्ने तर बिआरआई नस्विकार्ने प्रवृति ठिक नभएको बताए । उनले बाढी पहिरोबाट क्षति भएको पुल, बाटो र राहतको लागि विश्व बैंकमा ऋण लिने तर आम्दानी हुने विमानस्थलको ऋण मिनाह सोच ठिक नभएको बताउँदै उनले संयुक्त राष्ट्रसंघमा युक्रेन र इजरायलको पक्ष लिने शासकहरु अमेरिकी दलाल भएको बताए । सन् १९५०को असमान सन्धि गोर्खा भर्ति केन्द्र खारेज गर्नुपर्ने बताए । रेमिटान्सले देश अगाडि नबढ्ने बरु देशको उद्योगधन्दा विकास गरी, कृषिमा आत्मनिर्भर भए देश विकास हुने बताए । उनले आफ्नो देश मरुभूमि र उजाड बनाई विदेशीको देश बनाउन जाने ठिक नभएको बताउँदै उनले युवा पुस्तालाई सहिमार्गमा लान कलासंस्कृति र संस्कार सिकाउन भक्तपुर महोत्सब आयोजना गरेको बताए । मानिसको जीवनसंग सरोकार राख्ने सबै प्रकारका प्रर्दशनहरु राखी सिक्ने र सिकाउने शिक्षाको महोत्सब हुने बताए । उनले महोत्सबमा दैनिक दुई तीन लाख पर्यटक भित्र्याउने लक्ष्यका साथ काम गरिरहेको जानकारी दिए । महोत्सब भव्य र सभ्य तरिकाले सम्पन्न भए जुनसुकै दल वा पार्टीको भएपनि भक्तपुरबासीको इज्जत गर्वका साथ पर्यटकहरुले सम्मान गर्ने बताए ।

कार्यक्रममा प्राध्यापक विश्वमोहन जोशीले आफूभन्दा अरु अगाडि बढेको हेर्न चाहने र त्यसमा खुसि हुने व्यक्ति भनेको आमा बुवा र शिक्षक हुन भन्दै कला अथवा आर्ट भनेको मानिस चेतनशील प्राणी भएकोले कसरी राम्रो बनाउने, मिठास बनाउने, कर्णप्रिय बनाउने कार्य भएको बताउँदै पूर्विय दर्शनको कला एकदम महत्वपूर्ण भएको र ६४ प्रकारको कला गीतसंगीत, नृत्य, भेषभुषा, रहनसहन, लवाई खवाई लगायत मानिसले गर्ने हरेक गतिविधि कलासंस्कृति रहेको बताए । उनले चित्रकला, मुर्तिकला, बास्तुकला ढुंगेयुगदेखि कलाको विकास हुन्दै लिच्छवी पछि मल्लकालिनमा अत्यन्तै विकास भएको बताए । ज्ञान कसैले चोर्न नसक्ने र प्रकृतिप्रकोपले पनि नष्ट गर्न नसक्ने भएकोले ज्ञान जति फैलायो त्यति नै बृद्धि हुने धारणा व्यक्त गरे । उनले हाम्रो कला संस्कृति, समाज गुठी पर्व जात्रा सबै समाजवादी सोच अनुसार सामुहिक भावनाको नमुना भएको बताउँदै अरुले हामीमाथि गरेको संस्कारले चित्त दुख्छ भने त्यस्तो संस्कार हामीले अरुलाई पनि नगर्ने बताउँदै जन्मने वित्तिकै कसैले सिकेर आउँदैन त्यो समाजबाट सिक्ने हो भन्ने ।

नेपाल बक्सिङ महासंघका कोषाध्यक्ष गौतम सुजखुले कलासंस्कृतिको जानकार हुनुपर्ने बताउँदै रुस युक्रेन युद्धबाट अन्तर्राष्ट्रिय बक्सिङ संघ पनि टुक्राउन साम्राज्यवादी अमेरिका लागि परेको र त्यसको प्रभाव नेपाल पर्दा विभाजनको अवस्था रहेको बताए । कार्यक्रममा भक्तपुर जिल्ला बक्सिङ संघका अध्यक्ष रामकृष्ण प्रजापतिले सरकार परिवर्तन सँगै प्रदेश खेलकुद संघहरुमा चलखेल भएकोले एकजुट हुन र खेलाडीहरुले कला र संस्कृतिमा विशेष योगदान पुऱ्याउने भएकोले समाजमा प्रेरणा, एकता, र पहिचानलाई प्रवर्द्धन गर्दछ भन्ने धारणा व्यक्त गरे । उनले खेलकुदले अनुशासन, समर्पण, र आदर्शहरुको महत्व सिकाउँछ र यसले कला र संस्कृतिमा नैतिकता र मानवीय मूल्यहरू विस्तार गर्न मद्दत गर्दै भएकोले खेलाडीहरूले कला र संस्कृतिलाई अन्तर्राष्ट्रिय स्तरमा चिनाउन महत्वपूर्ण भूमिका खेल्ने विचार राखे ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

## "पुष्पा २ : द रुल" सिलिजको एक घण्टाभित्रै करोडौंको भ्युज

काठमाडौं । अल्लु अर्जुन र रश्मिका मन्दाना स्टारर बहुप्रतीक्षित भारतीय फिल्म 'पुष्पा २ : द रुल'को धमाकेदार ट्रेलर सार्वजनिक भएको छ । नेपाल सीमावर्ती भारतको बिहारको पटनास्थित गान्धी मैदानमा आयोजित भव्य समारोहमा ट्रेलर सार्वजनिक गरिएको थियो ।

साउथ सुपरस्टारद्वय अल्लु अर्जुन र रश्मिकाको उपस्थितिमा एक्सनप्रधान ट्रेलर प्रस्तुत गरिएको हो । सुकुमार निर्देशित यो फिल्म ५ डिसेम्बर अर्थात् २० मंसिरमा रिलिज तयारीमा छ । यो एक्सनप्रधान ट्रेलरमा अल्लु अर्जुन पुष्पराजको भूमिकामा छन् । एक्सन फिल्ममा रुचि राख्ने अल्लु अर्जुनका फ्यानलाई यो ट्रेलरले अवश्य उत्साह प्रदान गर्नेछ । फिल्ममा अल्लु अर्जुन एन्टीहिरो चरित्रमा छन् ।

यो फिल्मको अघिल्लो भागले नेपालमा समेत उछाल कमाइ गरेको थियो । दोस्रो भागले विश्वभर आक्रामक कमाइ गर्ने विश्लेषण भारतीय सञ्चारमाध्यमले गरेका छन् । 'पुष्पा २ : द रुल'ले यतिबेला इन्टरनेट प्लाटफर्ममा उछाल ल्याएको छ । युट्युब र सामाजिक सञ्जालका प्लाटफर्ममा अपलोड गरेपछि यसले इन्टरनेटमा आँधी ल्यायो । रिलिजको एक घण्टाभित्रै लाखौं भ्युज सिर्जना भए । मिथ्री मुभी मेकर्सको युट्युब च्यानलमा ट्रेलर रिलिजको एक घण्टामै यसले ४.३ मिलियन भ्युज प्राप्त गऱ्यो ।

ट्रेलरको हिन्दी संस्करणले एक घण्टाभित्रै २९ लाख भ्युज प्राप्त गऱ्यो । हिन्दीमा अहिलेसम्म ट्रेलरलाई ३ करोड २० लाख पटक हेरिएको छ । तेलुगु संस्करणलाई एक घण्टाभित्र ५.६६ मिलियन भ्युज प्राप्त भएको छ । तेलुगु संस्करणमा अहिलेसम्म ४ करोड ३० लाख पटक हेरिएको छ ।

निर्माताले तमिल, बंगाली, कन्नडा र मलायलम संस्करणमा पनि ट्रेलर रिलिज गरिसकेका छन् । फिल्ममा अल्लु अर्जुनले पुष्पराज, रश्मिका मन्दानाले श्रीवल्लभी र फहद फासिलले भंवर सिंह शेखावतको भूमिकामा पुनरागमन गरेका छन् । ट्रेलरको प्रतिक्रिया हेर्दा लाग्छ, 'पुष्प २' को ट्रेलर फ्यानका लागि कुनै उत्सवजस्तै हो । सुकुमार निर्देशित 'पुष्पा २' डिसेम्बर ५ मा प्रदर्शन हुँदैछ ।

## सौरभ चौधरीको "कर्मा"मा उपासना र मुकुन

काठमाडौं । सौरभ चौधरीको निर्देशनमा तयार हुन लागेको चलचित्र 'कर्मा'मा कलाकारको 'लाइनअप' बलियो बन्दै गएको छ ।

यो चलचित्रको मुख्य भूमिकामा केही समय अगाडि अभिनेता विपिन कार्कीलाई अनुबन्धित गरिएको थियो । यसैबीच चलचित्रको मुख्य भूमिकामा अभिनेत्री उपासना सिंह ठकुरी र अभिनेता मुकुन भुषाल पनि अनुबन्धित भएका छन् ।

चलचित्रमा उपसना अभिनेता विपिन कार्कीको जोडीको रुपमा देखिने छिन् भने मुकुन नेगेटिभ क्यारेक्टरमा देखिन लागेको जानकारी प्राप्त छ । विपिन र उपासनाले पहिलो पटक चलचित्रमा सहकार्य गर्न लागेका हुन् ।

चलचित्र 'पुर्ण बहादुरको सारङ्गी'मा मुकुनले गरेको अभिनयको अहिले सर्वत्र चर्चा छ ।

निर्देशक चौधरीले यसअघि 'अगस्त्य: च्याप्टर १'को निर्देशन गरेका थिए । एक्सन ड्रामा जनरामा निर्माण हुने यस चलचित्रको कथा निर्देशक चौधरी स्वयंले लेखेका छन् । 'अगस्त्य: च्याप्टर-१'बाट दर्शकहरू र समीक्षकहरूको राम्रो प्रतिक्रिया प्राप्त भएको थियो, जसले गर्दा 'कर्मा'प्रति पनि उच्च अपेक्षा गरिएको छ।

निर्देशक चौधरीका अनुसार यो चलचित्रमा अभिनेता विपीनलाईपहिलोपटक एक्सन अवतारमा भूमिकामा देख्न पाइनेछ । विपिनले 'कर्मा'का लागि ८ केजी तौल समेत बढाएका छन् ।

मंसिरको दोस्रो सातापछि छायांकनमा जान लागेको 'कर्मा'लाई नयाँ वर्षको छेको पारेर आगामी चैत्रको २९ गते रिलिज गर्ने टार्गेट राखेर काम अगाडि बढाइएको निर्देशक चौधरीले बताए । यो चलचिको छायांकन दाङ र रुकुममा गरिनेछ ।

यो चलचित्रको छायाकंन अगावै अन्तर्राष्ट्रिय प्रदर्शन अधिकार बिक्री भइसकेको छ । चलचित्रको इन्टरनेशनल राइट्स 'सेभेन सिज इन्टरटेन्मेन्ट'ले खरिद गरेको हो । आर्टिस्टिक इनटरटेनमेन्टको प्रस्तुति रहने 'कर्मा'मा बसन्त लम्सालले लगानी रहनेछ । चलचित्रमा विपिन, उपासना र मुकुनका अलवा अन्य कलाकारहरू छनोटको चरणमा छ ।

## ब्लकबस्टर आशा गरिएको "कंगुवा" बक्स अफिसमा फ्लप

काठमाडौं । बक्स अफिसमा उछाल कमाइ गर्ने विश्वास गरिएको सूर्या र बबी देओल स्टारर दक्षिण भारतीय फिल्म 'कंगुवा'ले भारतमा खराब सुरुवात गरेको छ । रिलिजको पहिलो दिन बिहीबार ओपनिङ सुस्त रह्यो । सप्ताहन्तभर कमजोर ट्रेन्डिङ देखिएको पिंकभिल्लाले जनाएको छ ।

आइतबार १०.२५ करोड भारु मात्र कमायो । शनिबार नै फिल्मको अकुपेन्सीमा गिरावट आएको थियो । चार दिनमा मात्र यसले ५७ करोड भारु कमाएको उल्लेख छ । विदेशमा २१ करोड कमाइ गरेको छ । विश्वभरको कमाइ ७८ करोड मात्र छ, जुन ब्लकबस्टरको अपेक्षा गरिएको फिल्मका लागि निराशाजनक हो ।

तमिलनाडुमा मात्र यसले आइतबार अर्को फिल्म 'अमरन'भन्दा न्यून कमाइ गऱ्यो । जबकि 'अमरन'को लागि यो तेस्रो साता हो । आइतबारको कमाइ हालैका अन्य सूर्याका फिल्मको भन्दा खराब छ । अघिल्ला फिल्मले पनि राम्रो प्रदर्शन गर्न सकेनन् । यो फिल्म सोमबार हलबाट उत्रिन सक्ने अनुमान छ ।

उत्तरी भारतमा यसले १२.५० करोड मात्र कमाउन सक्यो, जुन आफैंमा नराम्रो होइन तर बक्स अफिसमा प्रभाव पार्न भने यो आकडा पर्याप्त हुँदैन ।

तमिलनाडुमा मात्र यसले २४ करोड भारु कमाउँदा आन्ध्र प्रदेशमा १२ करोड कमायो । कर्नाटकामा ३.५० करोड भारु, केरलामा ५ करोड र बाँकी भारतमा १२.५० करोड कमायो । अर्कोतर्फ फिल्मले सकारात्मक वर्ड अफ माउथ प्राप्त गर्न सकेन, जसको प्रभाव बक्स अफिसमा स्पष्टरुपमा देखियो ।

## 'अग्निदहन'का माओत्सेसाग लिइएको वार्ता

काठमाडौं । कलाकार माओत्से गुरुङ निर्देशन र अभिनयमा अब्बल छन् । दर्जनौं फिल्ममा अभिनय गरिसकेका माओत्से फिल्म 'दयारानी'का निर्देशकसमेत हुन् । यिनै माओत्से आगामी मंसिर ७ गतेबाट रिलिज हुने फिल्म 'अग्निदहन'मा धामीको चरित्रमा दर्शकमाझ आउँदैछन् । माओत्सेसँग फिल्मलाई लिएर गरिएको कुराकानी:-

धामीको चरित्र निभाउन कत्तिको गाह्रो वा सजिलो ?

धामीको चरित्र निभाउन सजिलो चाहिँ पक्कै थिएन । एउटा यस्तो व्यक्ति बन्नु थियो, जसले व्यक्तिलाई होइन, समाजलाई आफ्नो नियन्त्रणमा राख्थ्यो ।

यो चरित्रका लागि के कस्तो तयारी गर्नुभयो ?

धेरै तयारी थिएन । म गाउँमा जन्मेर हुर्केको मान्छे । धामी झाँक्री र बोक्सीका थुप्रै घटनाहरू देखेको थिएँ । मैले देखेका तिनै धामीबाट क्यारेक्टर निकालेको हुँ ।

ट्रेलर हेर्दा तपाईंले धामी भएर महिलालाई फलामले डाम्ने, मलमुत्र खुवाउन आदेश दिने काम गर्नुभएको छ । यो काम तपाईंका लागि कत्तिको चुनौतिपूर्ण थियो ?

म फिल्मको कथाको पात्र भएर घटनामा उपस्थित भएको हुँ । त्यसकारण खासै समस्या चाहिँ भएन ।

माओत्से गुरुङले अहिलेसम्म दर्शकले सकारात्मक चरित्रमा हेरिरहँदा यो फिल्ममा तपाईं नेगेटिभ चरित्रमा देखिनुभएको छ । आफ्नो इमेज बिग्रिएला कि भन्ने डर छ कि छैन ?

म कलाकार हुँ । फिल्म अथवा नाटकमा अभिनय गर्दा म प्रोटोगोनिस या एन्टोगोनिस यस्तै मात्रै भुमिका गर्छु भनेर कहिले पनि रोज्दिनँ । मेरो भूमिकाले फिल्ममा कस्तो प्रभाव पार्छ, त्यो हेर्छु । दर्शकहरुले पनि सायद मबाट यस्तै भूमिकाको आश गर्नुहुन्छ होला ।

तपाईंको बुझाईमा बोक्सी आरोपित महिलाप्रति धामी किन यति क्रुर बन्छन् ?

मैले सबै धामी क्रुर भएको देखेको छैन । कतिपय धामीले मनोवैज्ञानिक रूपमा ट्रिटमेन्ट गरेको पनि देखेको छु । तर, जो जसले बोक्सीको नाममा महिलालाई दुख दिइरहेका छन्, त्यो साच्चिकै अमानवीय कार्य हो ।

धामी चरित्र निभाउनका लागि अध्ययन पनि गर्नुभयो कि ?

मैले धामी झाँक्रीले गरेको पुजाआजा र अनुष्ठान बच्चै देखि देखेको हुँ । सामन्य झारफुक मेरो बाबाले पनि गर्नुहुन्थ्यो । त्यसैले खासै धेरै अनुसन्धान गरिनँ ।

के कुराले तपाईंलाई अग्निदहनमा काम गर्ने इच्छा जाग्यो ?

'अग्निदहन'को निर्देशक घनश्याम लामिछाने मेरो मित्र पनि हुनुहुन्छ । उहाँले 'तपाईलाई सुहाउने एउटा रोल छ भनेर भेटौं' भन्नुभयो । उहाँलाई भेटें । रोल पनि सुनें । आफ्नो रोल मनपरेपछि फिल्ममा जोडिएँ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४
स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क १७ ने.सं. ११४५ कछलागा द्वादशी मंसीर १२ गते बुधबार, २०८१ 27 Nov. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## कीर्तिपुर, ग्रामथान र महाबु : दलहरुको लागि शक्ति परिक्षण र परीक्षा !

काठमाडौं । स्थानीय तहमा रिक्त रहेका ४२ पद मध्ये १ सिटमा नेकपा माओवादीबाट वडाअध्यक्षमा उम्मेदवारी दिएका एकजनालाई निर्वाचन आयोगले निर्विरोध निर्वाचित भएको घोषणा गरिसकेको छ भने ४१ सिटको लागि मंसिर १६ गते उपनिर्वाचन हुन लागेको हो ।

२०७९ मा स्थानीय निर्वाचन भएको साढे २ वर्ष अर्थात् ठ्याक्कै आधा कार्यकाल सकिएपछि दलहरू पुनः शक्ति परीक्षणमा लागेका छन् । अहिले हुन लागेको उपनिर्वाचनका ४१ पदमध्ये धेरैजसोको ध्यान कीर्तिपुर नगरपालिकाको प्रमुख, मोरङको ग्रामथान गाउँपालिका र दैलेखको महाबु गाउँपालिकाको अध्यक्ष पदमा निर्वाचनमा केन्द्रित रहेको दखिएको छ । यी स्थानको निर्वाचनमा राजनीतिक दलहरुको शक्ति प्रदर्शन हुने आकंलन गरिएको छ ।



यी तीनै पालिकामा ठूला दलहरूले तालमेल नगरी आ-आफ्नो हिसाबले चुनाव लडेका थिए । अघिल्लोपटक यी तीनवटै पालिका प्रमुख नेपाली कांग्रेसले जितेको थियो । एक्लै चुनाव लड्दा पनि कांग्रेसले तीनवटै पालिकाको प्रमुख र अध्यक्षमा जीत हात पारेको थियो ।

संयोगले तीनै पालिकाको निकटतम प्रतिद्वन्द्वी नेकपा एमाले थियो । कीर्तिपुर र ग्रामथानमा माओवादी केन्द्रका उम्मेदवार तेस्रो स्थानमा आएका थिए । महाबुमा भने नेकपा एकीकृत समाजवादीका उम्मेदवार तेस्रो भएका थिए ।

केन्द्र र प्रदेशको सत्तामा सँगै रहे पनि कांग्रेस र एमालेले तीनवटै पालिका प्रमुखमा प्रतिस्पर्धा गर्ने गरी उम्मेदवार अगाडि सारेका छन् । पूर्वी रुकुमको पुथा उत्तरगंगा गाउँपालिकाको उपाध्यक्षमा भने एमाले उम्मेदवार कांग्रेसको रूख चिह्नबाट चुनाव लड्दैछिन् ।

माओवादीको प्रभाव रहेकाले यहाँ कांग्रेसले उम्मेदवारी नदिई आफ्नो चुनाव चिह्नबाट एमालेलाई समर्थन गरेको हो । तर, यो बाहेक निर्वाचन हुने अन्य पदमा कांग्रेस र एमालेका आ-आफ्ना उम्मेदवार मैदानमा छन् । सत्तामा सँगै भए पनि चुनावी प्रतिस्पर्धा गरेर जाने दुवै दलको भनाइ छ ।

त्यस्तै उपत्यकामा रहेको र राजनीतिक दृष्टिकोणले पनि दलहरुको प्रतिष्ठासँग जाडिएको क्षेत्र रहेको कीर्तिपुर नगरपालिकामा २०७९ सालमा नेपाली कांग्रेसका राजकुमार नकर्मीले कीर्तिपुरमा ९०४३ मत प्राप्त गरेर नगरप्रमुख बनेका थिए । उनले ३५३६ मतले एमाले उम्मेदवार केशरत्न बज्राचार्यलाई पछाडि पारेका थिए । बज्राचार्यको ५५०७ मत आएको थियो । माओवादी केन्द्रका शिवशरण महर्जनले ४०९० मत ल्याएका थिए । नेकपा एकीकृत समाजवादीका बटुकृष्ण थापाको ११५३ मत आएको थियो । कीर्तिपुर नगरपालिका समेत रहेको काठमाडौं- १० बाट २०६४ सालमा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल प्रचण्ड निर्वाचित भएका थिए । त्यसपछि भएका सबै २०७०, २०७४ र २०७९ मा यो क्षेत्रबाट नेपाली कांग्रेसका राजेन्द्रकुमार केसी प्रतिनिधिसभामा निर्वाचित हुँदै आएका छन् ।

प्रमुख नकर्मीको निधनपछि कीर्तिपुर नगरपालिकामा हुने उपनिर्वाचनमा प्रमुख दलहरू फेरि एक्लाएक्लै चुनावी प्रतिस्पर्धा उत्रिँदैछन् । अर्थात् कांग्रेस, एमाले, माओवादीसहितका दलका ९ र स्वतन्त्रतर्फ ११ उम्मेदवारबीच प्रतिस्पर्धा हुँदैछ । नेकपा एकीकृत समाजवादीले माओवादी उम्मेदवारलाई समर्थन गर्ने भनिए पनि अझै उम्मेदवारी फिर्ता लिएको छैन ।

अघिल्लोपटक प्रमुख दलबीच प्रतिस्पर्धा भएको थियो । यसपटक नयाँका रूपमा राष्ट्रिय स्वतन्त्र पार्टी र काठमाडौं महानगरपालिका मेयर बालेन साहका घोषित उम्मेदवार

बाँकी पेज ७ मा

## नेवार संस्कृतिमा देखिएको तिथि मिति विवाद समाधान गर्ने अभियान शुरु



काठमाडौं - नेवाः देय् दबू स्वनिगः विशेष प्रदेशको संयोजनमा र नेवाः देय् दबू मध्यपुर थिमि नगर समितिको आयोजनामा गत मंसीर ७ गते शुक्रवार मध्यपुर थिमिको लायकू क्षेत्रमा तिथि विवादको बारेमा कार्यक्रमको शुभारम्भ गरेको छ ।

नेवाः (नेवार) समाजमा तिथि मिति विवादको कारणले नेवाः संस्कृति मनाउने सवालमा धेरै नै नेवार समुदाय अलमलमा परेकाले अग्रज दिग्गज विद्वानहरूसँगको संवादबाट निश्चित तिथि मिति तोकेर चाडपर्व मनाउन सहज वातावरण मिलाउने अभियान शुरु गर्ने भएका छन् ।

विशेष गरि ‘स्वन्ति नखः’ (तिहार), ‘मोहनी नखः’ (दशैं) लगायतका संस्कृति मनाउने क्रममा तिथिको विवाले गर्दा नेवाः समुदाय नै एकता नभएको हो कि भनी विभिन्न प्रश्नहरू उठाउने गरेका छन् । त्यति मात्रै हैन तिथि विवादका कारण ललितपुर, भक्तपुर र काठमाण्डौका नेवाःहरू बीच नै विवाद हुने र सामाजिक सञ्जालमा र संचार माध्यममा

बाँकी पेज ७ मा

## निर्माण व्यवसायीहरु कामका लागि होइन, ठेक्का पार्न टेण्डर भर्छन्



काठमाडौं । नेपाल कम्युनिष्ट पार्टी एमालेका महासचिव शंकर पोखरेलले निर्माण व्यवसायीहरुले काम गर्नका लागि नभई ठेक्का पार्नका लागि टेण्डर भर्ने गरेको आरोप लगाएका छन् । नेपाल निर्माण उद्योग परिषद् कार्यालयको सोमबार राजधानीमा उदघाटन गर्दै उनले त्यहीबाट गुणस्तरहिन कामको सुरुवात हुने गरेको दावी गरे ।

कार्यक्रमका प्रमुख अतिथि एमाले महासचिव पोखरेलले काम गर्न नसकिने भएपनि न्युन दरमा टेण्डर भर्ने र त्यही टेण्डर त्यही कम दर भरेकालाई पर्ने बताए । टेण्डर परेपछि काम गर्नुपर्ने बाध्यता हुने र त्यसैका लागि न्युन दरमै कमसल काम गरी कर्मचारीहरुसँगै पैसाका लागि सेटिंग गर्नुपर्ने आवश्यकता

बाँकी पेज ७ मा

## मध्यपुर थिमिमा सुविधा सम्पन्न अस्पताल भवनको शिलान्यास सम्पन्न




भक्तपुर । मध्यपुर थिमि नगरपालिकाबाट सञ्चालनमा रहेको नेपाल कोरिया मैत्री नगरपालिका अस्पतालले सुविधा सम्पन्न नयाँ भवन निर्माण गर्न लागेको छ । नयाँ भवन अस्पताल परिसरमै निर्माणको लागि आयोजित एक कार्यक्रमकाबीच उपप्रधान एवं शहरी विकास मन्त्री प्रकाशमान सिंहले शिलान्यास गरेको छ । सो अवसरमा उपप्रधान मन्त्री सिंहले रोग लागिसकेपछि थप मानसिक पिडा हुने भएकाले राग लाग्न नदिन सबै सचेत र सजग हुनुपर्ने बताउदै अस्पतालमा सञ्चालन हुने सेवाबाट नेपाल र कोरियाबीचको मैत्री सम्बन्धलाई अझ अगाडि बढाउने र आमनागरिकले पनि सहज रुपमा स्वास्थ्य सेवा उपभोग गर्न सक्ने विश्वास व्यक्त गरे ।

भक्तपुर क्षेत्र नं. २ का प्रतिनिधि सभा सदस्य दुर्लभ थापाले अस्पतालको स्तरोन्नतीले भक्तपुर जिल्ला मात्र नभई छिमेकी जिल्लाका नागरिकले समेत गुणस्तरीय स्वास्थ्य सेवा प्राप्त गर्ने विश्वास व्यक्त गरे । उनले स्वास्थ्य केन्द्रको रुपमा स्थापना भएको संस्था आजको अवस्थामा बिस्तार गर्न योगदान दिने पूर्व जनप्रतिनिधि र कर्मचारीहरुलाई पनि बिर्सन नहुने धारणा व्यक्त गरे ।

नेपालका लागि दक्षिण कोरियाका राजदुत ताईयोङ्ग पार्कले नेपाल कोरिया मैत्री नगरपालिका अस्पताल नेपाल र कोरिया सरकारको मित्रताको प्रतिक रहेको बताउँदै कोरियाली सरकार सदैव नेपाल र नेपालीको साथमा रहेको बताउँदैं अस्पतालको स्तर बृद्धिमा सधैं सहयोग गरी रहने प्रतिवद्धता जनाए ।

कोइकाका नेपालस्थित कन्ट्री डाईरेक्टर मुहेन कोङ्गले नेपालको स्वास्थ्य क्षेत्रको विकास र बिस्तारको लागि नेपाल कोरिया मैत्री नगरपालिका अस्पतालमार्फत सहयोग गर्न पाउँदा कोरियाली सरकार खुसी रहेको बताए । त्यस्तै मध्यपुर थिमि नगरपालिकाका प्रमुख सुरेन्द्र श्रेष्ठले नगरवासीलाई सहज रुपमा स्वास्थ्य सेवा उपलब्ध गराउन नयाँ भवन निर्माण गर्न लागेको जानकारी दिदैं “क्युङ्ग हि नेपाल स्वास्थ्य केन्द्रका रुपमा सन् १९९९ मा स्वास्थ्य सेवा प्रदायकको रुपमा थिमिमा प्रवेश भई क्रमशः कोरिया नेपाल मैत्री अस्पताल हुँदै वि. सं. २०७५ सालबाट नेपाल कोरिया मैत्री नगरपालिका अस्पतालको रुपमा नगरवासीहरुलाई सहज र सर्वसुलभ स्वास्थ्य सेवा प्रवाह गर्दै आइरहेको बताए । अस्पताललाई

बाँकी पेज ७ मा

## प्राकृतिक प्रकोपमा ज्यान गुमाउने अधिकांश आदिवासी जनजाति

**कुम्भराज राई**

काठमाडौं,काभ्रेपलाञ्चोकको भुम्लु गाउँपालिका-८ स्थित सिन्दुरेचौर हुँदै मध्यपहाडी लोकमार्ग निर्माणाधीन छ । दुई वर्षअघि लोकमार्गको ट्र्याक खन्दादेखि सिन्दुरेचौरको माझीबस्ती जोखिममा परेको थियो । गत असोज ११ र १२ गतेको वर्षासँगै राजमार्गमाथिबाट झरेको पहिरोले सो बस्ती बगायो ।

पहिरोले जितबहादुर र रामबहादुर माझीको दुई घरको नाम निशाना रहेन । रामबहादुरको ५१ वर्षीया आमा बाटुली माझीले घटनास्थलमै ज्यान गुमाइन् । गम्भीर घाइते अवस्थामा चारजनालाई स्थानीय र सेनाले उद्धार गरी उपचारका लागि अस्पताल पुऱ्याए । बाटुलीको परिवार अति विपन्न तथा सिमान्तकृत समुदायको परिवार हो । उक्त परिवारले मजदुरी गरेर जिविका चलाउँदै आएका थिए ।

उनीहरू माछा मार्ने पुर्ख्यौली पेशाबाट समेत विस्थापित भइसकेका छन् । स्थानीय सरकारले खोलाबाट ढुङ्गा, गिटी, बालुवा झिक्ने ठेक्का लगाउन थालेपछि माछा मार्ने स्थल अभाव हुँदा परम्परागत पेशा छाडेर मजदुरी गर्दै आएको सोही वडाका वडा अध्यक्ष मोतीलाल तामाङले बताउनुभयो ।

“उनीहरूसँग भएको जग्गा जमिनले चार महिना पनि खान पुग्दैन”, अध्यक्ष तामाङले भन्नुभयो, “परम्परागत पेशा लोप भएपछि जहाँ जे काम पायो, त्यही गर्दै आएका उनीहरूलाई मध्यपहाडी लोकमार्गकै कारण सुरू भएको पहिरोले विस्थापित बनायो र एकजनाको ज्यान पनि लग्यो ।”

काभ्रेपलाञ्चोककै रोशी गाउँपालिकाले गत असोजको बाढी पहिरोमा सबैभन्दा बढी मानवीय क्षति व्यहोरेको छ । जम्मा १४ जनाको ज्यान गएकामा वडा नं ४ मै एकै परिवारको पाँच जनाले ज्यान गुमाए । बस्तीमाथीबाट आएको ढिस्कोले घरै बगाएपछि चन्द्रबहादुर तामाङ र उहाँकी श्रीमति कान्छीमाया, छोरा डिल्लीबहादुर, नाति सफल र नातिनी बुद्धिमायाको एकै चिहान भयो ।

भिरालो जमिनमा बसोबास गरेका उनीहरूको खेती गर्ने जग्गा जमिन थोरै थियो । सोही वडाका अध्यक्ष तेजबहादुर मगरका अनुसार उनीहरू पुस्तौंदेखि मजदुरी गरेर साँझ बिहानको छाक टार्ने परिवार हुन् । विसं २०२८ सालमा पनि पहिरोजाँदा जोगिएका चन्द्रबहादुरको परिवार यसपालीको पहिरोबाट भने

बाँकी पेज ७ मा

# सडक अतिक्रमणले नेवार जातिको सांस्कृतिक मुटुमै प्रहार

गणेश राई

बाडेगाउँको लाछी टोलस्थित लिच्छविकालीन कालभैरबको मन्दिर छेउमा वृद्धवृद्धाका दिवा आश्रम छ । त्यही आश्रममा ९४ वर्षीय जेष्ठ नागरिक पशुपति महर्जनलगायत समवयीहरूको दिन बित्ने गर्छ । आजका जेष्ठ नागरिक उनै पशुपति महर्जन आफ्नो जमानामा यही ठाउँको जनप्रतिनिधि हुनुहुन्थ्यो । उहाँ २०२३ सालदेखि २०३३ सालसम्म बाडेगाउँ गाउँ पञ्चायतको प्रधानपञ्च हुनुहुन्थ्यो । उहिले यही वृद्धाश्रममा गाउँ पञ्चायतको कार्यालय थियो । अहिले बिहान मठमन्दिर धाउने र दिवा आश्रममा बसेर समवयीसँग अतीतका पलहरू कोट्याएर समय कटाउने गर्नुहुन्छ, यहाँका जेष्ठ नागरिकहरू ।

नेपालभाषामा ‘लाछी’ भन्नाले सार्वजनिक खुल्ला ठाउँ, पाटी रहेको, जात्रामा सामुहिक भोज खाने ठाउँ, नाच प्रदर्शन गर्ने ठाउँ, धान, गहुँ सुकाउँने ठाउँ भन्ने बुझिन्छ। बाडेगाउँको लाछी टोलमा ऐतिहासिक षडक्षरी लोकेश्वर मन्दिर, कालभैरबको मन्दिर, पोखरी, ढुङ्गेधारा, पाटी, इनार आदि छन् ।

यही लाछी टोलको लोकेश्वर मन्दिर र कालभैरब मन्दिरको बिचबाट सातदोबाटा-गोदावरी सडक लमतन्न तन्किएको छ । सडकमा हरपल अनेक खाले सवारी साधनहरू गुडिरहन्छन् । जब ठूला आकारका साझा बस दुईतिरबाट यो ठाउँ आइपुग्छन्, तब सडक जाम हुन्छ । किनकि सडक साँघुरो छ । एउटा साझा बस अघि बढ्न अर्को साझा बस केही पछाडि सर्नुपर्छ । हरेक दिन छिनछिनमा यो ठाउँमा सवारीसाधनहरू जाम हुन्छ ।

अनि त्यतिखेर पशुपति महर्जनलगायत जेष्ठ नागरिकहरू निस्केर रमिता हेर्ने गर्नुहुन्छ । अनि चियाउनु हुन्छ । कुनै गाडीले कालभैरबको मन्दिरमा ठक्कर देला कि अथवा पारितर्फ षडक्षरी लोकेश्वर बुद्ध मन्दिरमा ठोक्काए कि ? भनेर चियोचर्चा गर्ने गर्नुहुन्छ । कयौं पटक गाडी धस्सिएर मन्दिर छियाछिया जीर्ण बनेका छन् ।

यो दैनिकी ललितपुरको गोदावरी नगरपालिका वडा नं.१४ बाडेगाउँ लाछी टोल र यहाँका बासिन्दाहरूको हो । बस्तीमाझमा साँघुरो बाटोलाई मूल सडक विस्तार भएपछि यहाँका बासिन्दा अप्ठ्यारोमा परेका छन् । परम्परागत घरहरू आँगनविहीन अतिक्रमणमा परेको वर्षौं भएको छ । जनप्रतिनिधिहरूले स्थानीयलाई सोध्दै नसोधी सडक विस्तार गर्न डोजर चलाएपछि पटक-पटक झडप भएको थियो । त्यसरी सरकारबाट बलमिच्याइँ भएपछि हरिसिद्धि-गोदावरी सडक विस्तार पीडित संघर्ष समिति गठन गरेर न्यायका निम्ति लड्न थालेको दशक बितिसकेको छ । संघर्ष समिति सर्वोच्च अदालतको ढोका ढकढकाउँदै गुहार्न पुग्यो । अन्ततः सर्वोच्चले अन्तरिम आदेश जारी भएपछि तत्कालका निम्ति मिल्यो तर समस्याहरू ज्युँकात्युँ छन् ।

सडकसँगै पूर्वतर्फ खुला ठाउँ छ । त्यसको पछाडि सामुदायिक गुठी घर छ । आँगनमा सडकले मिचेको लोकेश्वर बुद्धको मन्दिर छ । मन्दिरसँगै बिहार छ । आँगनको आर्य श्री प्रज्ञापारमिता नाम संगिती ज्ञानमाला भजन मण्डल छ । यो भजनमण्डलको घर र चैत्य पोखरी (द्यः पुखु)माथि निर्माण गरिएको छ । यी मन्दिर, चैत्य, बिहार, इनार, पोखरी, ढुङ्गेधारा वरिपरि शिलालेखहरू भेटिन्छन् भने कतिपय हराइसकेको छन् । ठाउँको अभावमा ऐतिहासिक पवित्र पोखरीलाई छोपेर संरचना निर्माण गरिएको छ । त्यसमुनि अहिले पनि पानी पोखरी छ भनेर झट्टै कसैले थाहा पान सक्दैन ।

सडक ज्यादै साँघुरो छ । यो टोल सडक छेउमा हेर्दा थोत्रा घरहरू उभिएका देखिन्छ । सडक दायाँ-बायाँ सत्तल पाटीहरू देखिन्छन् । उहिलेदेखि यो टोलमा खट जात्रा संचालन हुनेगरी फराकिलो बाटा राखिएका छन् । १६ जनाले बोक्न सक्ने खटलाई टोल-टोलमा घुमाउने परम्परा आजपर्यन्त कायम छ । आज पनि भित्री टोल-टोलको बाटो सडक जत्तिकै फराकिलो रहेका छन्, जहाँ ढुङ्गा बिछ्याइएका छन् ।

काठमाडौं उपत्यकाको सबैभन्दा मनोरम पर्यावरणीय थलो गोदावरीमा अन्तर्राष्ट्रिय सम्मेलन केन्द्र रहेको छ । त्यसैले पनि हरेक किसिमका ठूला सम्मेलन यहीं आयोजना हुने गरेका छन् । चक्रपथको सातदोबाटोबाट हरि सिद्धि, ठैब, बाडेगाउँ हुँदै गोदावरी पुग्ने जो कोही सडक साँघुरो भएर यातायात अवरुद्ध हुँदा कार्यक्रम स्थल पुग्न ढिलो हुने गर्छ । अनि स्थानीयबासीलाई ‘विकासको बिरोधी’ अर्थात् सडक मापदण्डलाई नटेर्ने समुदायको संज्ञा दिने गर्दछन् ।

‘हामी विकासको बिरोधी होइनौं,’ संघर्ष समितिका सदस्य सुरेश बज्रचार्य भन्नुहुन्छ, ‘लिच्छविकालदेखि बसोबास गर्दै आएका आदिवासी नेवार जातिको परम्परागत सांस्कृतिक थलो र बस्तीलाई जबरजस्त मास्न पाइन्नँ । सडक सबैको लागि हो भन्ने हामीलाई थाहा छ । तर नेवार जातिको बस्तीमाझ अझ मुटुमै रहेको लाछी टोललाई संकटमा पार्ने गरी सडक बिस्तार गर्न डोजर चलाउनु न्यायको विषय होइन । हाम्रो मुटुमै प्रहार गरेजस्तो भएको छ । यो ऐतिहासिक मूल बस्तीलाई छलेर सडक बनाउन वैकल्पिक ठाउँ प्रशस्त छन् । हामीलाई विकास बिरोधी ठान्नु अन्याय हुनेछ ।’

स्थानीयबासीहरू सडक छेउका परम्परागत घरहरूमा बस्ने वातावरण नभएपछि अन्यत्र बसोबास गर्न थालेका छन् । स्थानीयबासीको अडान छ- लिच्छविकालीन ऐतिहासिक षडक्षरी लोकेश्वर मन्दिर (बुद्ध मन्दिर) र कालभैरबको मन्दिरलाई जहाँको तहीँ रहनु पर्छ । सडक आसपासका घरहरूको क्षतिपूर्ति र जग्गाको मुआब्जा पाएमा सडक दुईवटा गाडी ओहरदोहर गर्नसक्ने गरी सडक संरचनाका निम्ति छोड्न चाहन्छ । तर त्यसनिम्ति तीन तहका सरकारका निकायले स्थानीयसँग दोहोरो छलफल हुनुपर्छ । सडक पीडित सरकारबाट घरको क्षतिपूर्ति र जग्गाको मुआब्जा पाउने आशा सबैले राखेका छन् । त्यसैगरी सडक छेउका कतिपय पाटीपौवाहरू भत्किन थालेका छन् । कतिपय घरहरू जीर्ण बनेका छन् ।

सर्वोच्चको अन्तरिम आदेशपछि सरकार मौन

सर्वोच्च अदालतले ललितपुरको हरिसिद्धि-गोदावरी सडक विस्तार पीडित संघर्ष समितिका अध्यक्ष जोगबहादुर महर्जनलगायतले दिएको निवेदनको सुनवाईपछि अन्तरिम आदेश जारी गरेको थियो । सर्वोच्च अदालतका तत्कालीन न्यायाधीश विश्वम्भरप्रसाद श्रेष्ठको एकल इजलासले २०७३ चैत १७ गते जारी गरेको अन्तरिम आदेशको व्यहोरा यस्तो छ ।

‘अन्तरिम आदेश माग सम्बन्धमा विचार गर्दा निवेदकहरूको घर बसोबास रहेकोमा घर भत्काई बाटो निर्माण गर्दा कानूनले तोकेको प्रक्रिया अवलम्बन गर्नुपर्ने हुन्छ । यस्तै विषय समावेश भएको सानु श्रेष्ठ विरुद्ध नेपाल सरकार भएको रिट नं.०७२-६०-०६०४ मुद्दा पूर्ण इजलासमा सुनुवाईको लागि पेस भइरहेको देखिन्छ । समान कानूनी प्रश्न समावेश भएको विषय हुँदा सो पूर्ण इजसालबाट टुङ्गो नलागेसम्म निवेदकको जग्गामा रहेको घर भत्काउने, तोडफोड गर्ने, क्षति पुऱ्याउने कानूनी प्रक्रिया नपुऱ्याई सडक विस्तार गर्ने कार्य नगर्नु नगराउनु भनी सर्वोच्च अदालत नियमावली, २०४९ को नियम ४१ बमोजिम अन्तरिम आदेश जारी गरिदिएको छ । यो आदेशको जानकारी प्रत्यर्थीहरूलाई दिनू ।’

उक्त अन्तरिम आदेश जारी भएपछि सरकारको तर्फबाट डोजर आतंक बन्द भएको ८ वर्ष भयो । तर पीडितहरूले त्यसयता सरकारको पक्षबाट न्याय पाउन सकेका छैनन् । नत लिच्छविकालीन सम्पदालाई परम्पराअनुसार संरक्षण संवर्द्धन गर्न सकेका छन् । सडकमा ठूला, साना सबैखाले यातायातका साधन गुडिरहेकै छन् ।

‘वास्तवमा यो सडक टोलको बाटो थियो, हाम्रा पुर्खाहरूले जात्रा चलाउन र रथ घुमाउन बनाइएका बाटोलाई सडक बनाएपछि बाडेगाउँका हामी नेवारहरू साँस्कृतिक अतिक्रमण परेका छौं,’ संघर्ष समितिका अध्यक्ष जोगबहादुर महर्जन भन्नुहुन्छ, ‘सुरुमा घरको रछ्यान मिच्यो, त्यसपछि पेटी मिच्यो अहिले आएर आधा घर नै भत्काउन लागेपछि हामी संघर्षमा उत्रिनु परेको हो । हामी हुँदैन भन्ने पक्षमा छैनौं । घरको क्षतिपूर्ति, जग्गाको मुआब्जा दिएमा छाड्न सक्छौं । तर हाम्रो घरजग्गाको समस्याभन्दा पनि ऐतिहासिक सांस्कृतिक सम्पदाहरू मासिने गम्भीर खतरा छ । हाम्रा पुर्खाले निर्माण गरेका सम्पदा हाम्रो पहिचान हो । यसको संरक्षण हुनुपर्छ भन्ने हाम्रो मुख्य चासो हो ।’

सर्वोच्चको आदेशपछि कुनै निकायले समस्याको निकास पहिल्याएका छैनन् । मुआब्जा, क्षतिपूर्ति अथवा वैकल्पिक सडक मार्गको कुनै व्यवस्था नहुँदा पीडितहरूको पीडा झनै उकुस पल्टिएका छ । स्थानीय आफैं थाकेर आफ्नो जग्गा छाडुन् र सडक विस्तार गर्न सजिलो हुने सरकार पक्षको मानसिकता देखिन्छ । तर जसले सडक छाडेका छैनन्, उनीहरूका साथमा घरजग्गाको धनीपूर्जा कायमै छ ।

बाडेगाउँ संघर्ष समितिको तर्फबाट कानुनी पक्ष हेर्नुभएका अधिवक्ता शंकर लिम्बू सरकारले सर्वोच्चको आदेशअनुसार काम गर्नुपर्ने बताउनु हुन्छ । ‘सरकार पक्षले हामीले यो सडक विस्तार परियोजना साबिक कुनै पनि सम्पदाहरू नभत्काउने र प्राविधिक रूपमा बाटो नबढाउने बाटो जति छ त्यतिमै पिच गर्ने र अरु थप नगर्ने भनेर सर्वोच्च अदालतमा निवेदन हाल्नु भयो,’ उहाँले भन्नुभयो, ‘नेपाल सरकार मन्त्री परिषद्बाट त्यो निर्णय गरिसकेपछि त्यही आधारमा मुद्दाको रिटमा त्यही बोलिएको कुरा हो । सरकारले त्यहाँको यथास्थितिमा राम्रोसँग पिच गर्नुपर्छ । लापरबाही भइरहेको छ । त्यहाँको सम्पदाहरूलाई संरक्षण गर्नुपऱ्यो । कसैको घर भत्काउनु भएन ।’

गोदावरीमा शासकको आँखा

अहिले विद्यमान सडक उहिलेकै संरचना हो । पहिले कच्चीबाटो थियो । तत्कालीन प्रधानपञ्च पशुपति महर्जनका अनुसार २०३० सालमा बाटो सुधार भएर पिच भएको थियो । त्यसअघिसम्म सामान्य आउजाउमात्र हुन्थ्यो ।

फुलचोकी पहाडमुनि गोदावरी क्षेत्रमा सेन्ट जेभियर्स स्कुललगायत सरकारमातहतका मत्स्य पालन, बोटानी, कृषि, पर्यावरणलगायतका अध्ययन, अनुसन्धान केन्द्र स्थापना तथा विस्तार गरिए । त्यसरी तत्कालीन राजा परिवार तथा सरकारको चासो गोदावरी क्षेत्रमा बढेसँगै बाडेगाउँका आदिवासीहरूको सांस्कृतिक थलोमाथि अतिक्रमण बढ्न थालेको थियो । प्रजातन्त्र, लोकतान्त्रिक गणतन्त्र कालमा पनि शासक वर्गले ऐतिहासिक सांस्कृतिक सम्पदाप्रति बेवास्ता गर्दै आएका छन् ।

**क्रमशः अर्को अंकमा**

# ओलीलाई चीनँ ाग राष्ट्र र जनहितका कुरा गर्न आग्रह

काठमाडौं । नेपाल कम्युनिस्ट पार्टीका महासचिव विप्लव सी र प्रवक्ता प्रकाण्ड सीले नेकपा (एमाले) अध्यक्ष तथा प्रधानमन्त्री केपी शर्मा ओलीलाई चीनसँग राष्ट्र र जनहितका कुरा गर्दा आउने अबरोध र बिरोधसंग नडराउन आग्रह गरेका छन् ।

नेपाल कम्युनिस्ट पार्टीका महासचिव विप्लव सी , प्रवक्ता प्रकाण्ड सी र नेकपा (एमाले) अध्यक्ष तथा प्रधानमन्त्री केपी शर्मा ओलीबीच मंगलबार बिहान प्रधानमन्त्री निबास बालुवाटारमा भएको भेटवार्तामा प्रधानमन्त्री ओलीलाई उनीहरुले सो आग्रह गरेका हुन् ।

नेपाल कम्युनिस्ट पार्टीका केन्द्रिय सल्लाहकार राजेन्द्र सीका अनुसार उक्त भेटबार्तामा नेपाल कम्युनिस्ट पार्टीका महासचिव विप्लव सी र प्रवक्ता प्रकाण्ड सीले प्रधानमन्त्री केपी शर्मा ओलीको आसन्न चीन भ्रमणको सफलताको शुभकामना दिएका थिए । उनीहरुले प्रधानमन्त्री केपी शर्मा ओलीलाई चीन भ्रमणको क्रममा देश र जनहितको बिषयमा चीन सरकारसंग सहमति गर्न सुझाब दिदै राष्ट्र र जनहितका कुरा गर्दा आउने अबरोध र बिरोधसंग नडराउनसमेत आग्रह गरेका थिए ।

यसैगरी, उक्त भेटवार्तामा महासचिव विप्लव सी र प्रवक्ता प्रकाण्ड सीले देशको स्थिति जटिल र अराजकता मौलाउन खोजेको भन्दै त्यसको समाधान नयाँ ढङ्गले खोज्नु पर्ने बिषय औल्याएका थिए।

यसैगरी, उक्त भेटवार्तामा महासचिव विप्लव सी,प्रवक्ता प्रकाण्ड सी र प्रधानमन्त्री ओलीबीच भएको उक्त भेटबार्तामा तीन बुँदे सहमति कार्यान्वयनलगायत समसामयिक राजनीतिक बिषयमा छलफल भएको बताइएको छ।

उक्त भेटवार्तामा महासचिव विप्लव सी र प्रवक्ता प्रकाण्ड सीले तीन बुँदे सहमति कार्यन्वयनमा ढिलाई नगर्न र तीन बुँदे सहमति बिपरित पछिल्लो समय गिरफ्तार परेका नेकपाका कार्यकर्तालाई तत्काल रिहा गर्न आग्रह समेत गरेका थिए ।

यसैगरी, उक्त भेटवार्तामा प्रधानमन्त्री केपी शर्मा ओलीले तीन बुँदे सहमति कार्यन्वयनमा सरकार दृढ भएको बताउदै छिटै टुङ्गोमा पुर्याउने बताएका थिए । उनले चीन भ्रमण सकेर फर्केपछि यस बिषयमा थप छलफल गर्ने समेत बताएका थिए।

यसैगरी, उक्त भेटवार्तामा दुई पार्टीबीचको छलफल र सहकार्यलाई अघि बढाउने बिषयमा समेत छलफल भएको बताइएको छ।

स्मरणीय छ, २०७७ फाल्गुन २१ गते तत्कालिन केपी ओली नेतृत्वको सरकार र नेपाल कम्युनिस्ट पार्टीबीच भएको ३ बुँदे सहमतिमा दुवै पक्ष- नेपाल सरकार तथा नेपाल कम्युनिष्ट पार्टी, देशको राजनैतिक समस्याहरु वार्ता तथा संवादबाट समाधान गर्न, नेपाल कम्युनिष्ट पार्टी आफ्ना सबै राजनैतिक क्रियाकलापहरु शान्तिपूर्णरुपमा संचालन गर्न र नेपाल सरकार नेपाल कम्युनिष्ट पार्टीमाथि लगाइएको प्रतिबन्ध, कारागारमा रहेका पार्टीका नेता तथा कार्यकर्ताहरुको रिहाई र सम्पूर्ण मुद्दाहरु खारेज गर्न सहमत भएको थियो । यो सहमतिको नेपाल कम्युनिस्ट पार्टीले अक्षरश : पालना गरेपनि सरकारले भने पूर्णरुपमा कार्यान्वयन गरेको छैन।

# सप्तकौशिका सहकारीको १४ औं वार्षिक साधारणसभा

मध्यपुर थिमि । मध्यपुर थिमि नगरपालिकाको शंखधर चोकस्थित कार्यालय स्थापना गरी सदस्यबीच वितीय कारोबार गर्दै आएको सप्तकौशिका बचत तथा ऋण सहकारी संस्था लिमिटेडले १४ औं वार्षिक साधारणसभा सम्पन्न गरेको छ ।

संस्थाका अध्यक्ष गोविन्दकृष्ण श्रेष्ठको सभापतित्वमा सम्पन्न भएको कार्यक्रमको उद्घाटन मध्यपुर थिमि नगरपालिकाका नगर उपप्रमुख विजयकृष्ण श्रेष्ठले गरेको थियो । स्थानीयद्वारा सञ्चालनमा रहेको सहकारीमा हालसम्म कुनै समस्या नरहेको र नगरपालिकाले स्थानीय सरकारको अधिकार प्रयोग गर्दै सहकारी ऐन र नियमावलीजारी गरिसकेको र सोही ऐनको आधारमा सहकारीको नियमन गर्ने कार्य नगरपालिकाले थालिसकेको बताए ।

कार्यक्रममा अध्यक्ष गोविन्दकृष्ण श्रेष्ठले आर्थिक वर्ष २०८०/८१ को वार्षिक प्रतिवेदन प्रस्तुत गर्दै शेयर पुँजी २ करोड १६ लाख ३९ हजार २ सय रुपैंया र सदस्य संख्या १७ सय ३७ जना पुगेको जानकारी दिए । संस्थाका कोषाध्यक्ष बालकृष्ण शुद्धकारले आर्थिक प्रतिवेदन पेश गर्दै आर्थिक वर्ष २०८०/८१ मा ५ लाख ९१ हजार रुपैंया संचालन नाफा भएको जानकारी दिए । कार्यक्रममा नगरपालिका सहकारी शाखा प्रमुख अभयन्द्र रञ्जित, भक्तपुर जिल्ला बचत संघका प्रतिनिधि पञ्चकृष्ण श्रेष्ठ र ओस्ला सहकारीका अध्यक्ष रोशन बज्राचार्य लगायतले शुभकामना मन्तव्य व्यक्त गरेको थियो । थिमि बैंक्वेटमा भएको कार्यक्रममा लेखा संयोजक शंकरप्रसाद काफ्लेले लेखा सुपरिवेक्षण समितिको प्रतिवेदन प्रस्तुत गरेको कार्यक्रममा सचिव विन्दुराम श्रेष्ठले सहजीकरण गरेको थियो ।

# माओवादी केन्द्र सरकारमा रहँदा भएका सकारात्मक कामहरु

**विजय कृष्ण श्रेष्ठ**

नेपाललाई काण्डैकाण्डको देशको परिचय वोकाउन खोजेको अवस्थालाई नेकपा(माओवादी केन्द्र)को सरकारले निम्ट्यान्न पार्न खोजेको थियो। भ्रस्टाचार विरोधी कदमका रुपमा हाईप्रोफाईलहरु नेता, अरवपती ब्यापारी, वहालवाला सचिव, पुर्व सचिव, कर्मचारीहरु, पुर्वमन्त्रीहरु भट्टाभट कारवाहिमा पर्न थालेको जनताले पहिलोपटक देखिनेगरी सुशासनको अनुभुती गरेको थियो । जुन कुरा तात्कालिन प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले प्रधानमन्त्रीकोरुपमा सम्मानित संसदमा उहाँको कार्यकालको अन्तिम सम्वोधनमा स्पष्टरुपमा हामिले पाउन सक्छौं ।

नेकपा(माओवादी केन्द्र) नेतृत्वको सरकारले गरिरहेको भ्रष्टाचार विरोधी कामले त्रसित भएर सरकार ढालेको र सत्तारोहणको १०० दिन कटिसक्दा पनि देश र जनताले राम्रो भन्न सक्ने उदाहरणीय काम हुन नसक्दा जनता निराश भएको अवस्था छ । जुन कुराको निराशा अहिले सडकमा पोखीन शुरु भै सकेको छ। १०० दिनको अवधीमा ८९ अरव सार्वजनिक ऋण थपिएको समाचारले जनतामा अझ निराशा थपिएको छ । अघिल्लो सरकारले मितब्ययी सरकारको छाप वसालेको तात्कालिन अर्थमन्त्री वर्षमानपुनले सम्मानित संसदमा त्यसको दाता सहितको प्रस्तुतिवाट पुष्ट्याएको थियो ।

असोज १२ मा अविरल वर्षाले देशको काभ्रे,ललितपुर,सिन्धुली लगायतका धेरै क्षेत्रमा जनधनको क्षति पुर्याएको थियो तर सरकारले वाढी पिडितहरुका लागि उचित राहत उधारको काम समेत गर्न सकेको छैन । आजसम्म पनि जनता पालमा विताउन परेको समाचार आउँदा दु:ख लाग्छ । नखुखोलाको वाढिमा घण्टौंसम्म फसेकाहरु उधारहुन नसकेर खोलाले एउटा पुरै परिवार बगाएको जनताले देखेकै छ ।

नेकपा(माओवादी केन्द्र) नेतृत्वको सरकारले देशमा सुशासन,समृद्धि प्राप्त गर्न गरेका केही मुख्य मुख्य असल कामहरुको वुंदागत रुपमा यस अंकमा चर्चा गर्न जादैछु ।

१) नक्कली भुटानी सरणार्थी काण्डः

वालकृष्ण खाँड, टोपवहादुर रायमाझी,भुटानी सरणार्थी नेता तेकनाथ रिजाल लगायतका हाईप्रोफाईलहरुलाई पक्राउ गरि दण्द सँजाय दिलाउन खोजेको अवस्था छ । जसमा काङ्ग्रेस,एमालेका नेतृत्वमा रहेका ठुला नेताका आफ्नै मान्छेहरुको नाम समेत मुछिएको थियो ।

२) नक्कली शरणार्थी प्रकरणमा अहिलेसम्म के भयो यहाँ चर्चा गरौं जुन सामाजिक सन्जालवाट साभार गरिएको छ ।

- ४ जेठः शरणार्थी नेता टेकनाथ रिजाल र हज कमिटिका अध्यक्ष शमशेर मिया पक्राउ

- १ जेठः आफ्नो पनि नाम मुछिएको भन्दै पूर्वसांसद आङ्टावा शेर्पा प्रहरीसमक्ष आफैँ उपस्थित

- ३१ वैशाखः सम्पर्कविहीन रहेका पूर्वउपप्रधानमन्त्री टोपबहादुर रायमाझी पक्राउ

- ३१ वैशाखः पूर्वगृहमन्त्री बालकृष्ण खाँड सहित अन्यलाई अनुसन्धानका लागि चार दिन म्याद थप गरिएको ।

- २७ वैशाखः पूर्वगृहमन्त्री वालकृष्ण खाण र उनका स्वकीय सचिव नरेन्द्र केसी पक्राउ ।

- २७ वैशाखः पूर्वउपप्रधानमन्त्री टोप वहादुर रायमाझीको नाम जोडिएपछि एमालेद्वारा उनी सचिव पदबाट निलम्बित गरिएको ।

- २० वैशाखः उपराष्ट्रपति कार्यालयका सचिव टेकनारायण पाण्डे पक्राउ

- २० वैशाखः टोपवहादुर रायमाझीका छोरा सन्दीप रायमाझी समेत पक्राउ ।

- २० वैशाखः पूर्वगृहमन्त्री रामबहादुर थापाका छोरा प्रतीक थापाविरुद्ध पक्राउपुर्जि जारी गरिएको ।

- १९ वैशाखः तात्कालिक उपप्रधान तथा गृहमन्त्री रामबहादुर थापाका सुरक्षा सल्लाहकार इन्द्रजित राई पक्राउ ।

- १२ चैतः नक्कली शरणार्थी प्रकरणलाई लिएर त्यसको गिरोहका सञ्चालकहरू केशव दुलाल, सानु भण्डारी र टङ्क गुरुङ पक्राउ ।

३) मुख्य नाईके भनिएका बेचन झा पक्राउ परे लगत्तै माओवादी केन्द्रका अध्यक्ष प्रचण्ड नेतृत्व सरकार ढलेको थियो ।

- गिरिबन्धु टि-स्टेट काण्ड

गिरिवन्धु टिस्टेट काण्ड नेपालमा एक विवादास्पद मुद्दा हो। यो प्रकरणमा तत्कालीन केपी शर्मा ओली नेतृत्वको सरकारले झापास्थित गिरिवन्धु चिया बगान (गिरिवन्धु टि-स्टेट) अन्तर्गत रहेको झन्डै ३४४ बिघा जग्गा साटफेर गर्न अनुमति दिएको थियो। सर्वोच्च अदालतले यो निर्णयलाई "अनुचित, अपरिपक्व र उधारो शर्तयुक्त" भन्दै बदर गरेको छ ।

सर्वोच्च अदालतले यो निर्णय कानूनी प्रावधानअनुकूल नभएको भन्दै तत्कालीन मन्त्रिपरिषद्को निर्णयलाई बदर गरेको हो। अदालतले कृषि उद्योगका लागि छुट दिइएको जग्गा अन्य प्रयोजनमा प्रयोग गर्न नहुने व्याख्या गरेको छ ।

- बालमन्दिर जग्गा काण्डः

२८ रोपनी ५ आना जग्गा बिशालग्रुपको चंगुलवाट उम्काउन कारवाही अगाडी वढाएको छ । २०७२ सालमा २१३२ साल सम्मका लागि वार्षिक ९० लाखमा भाडा सम्झौता गरि दिएको थियो । २९ रोपनी जग्गा मध्य ९ रोपनी भारतिय शिक्षा वोर्डवाट संचालित राय स्कुललाई सवलिजमा बृहस्पति स्कुलले प्रदान गरेको थियो । धेरैजसो सम्झौता काङ्ग्रेस सन्त नेता गणेशमान सिंह कि पुत्री,प्रकाश मान सिंहका बहिनी रीता सिंहको कार्यकालमा भएको थियो उक्त सम्झौता खारेज गरिएको छ । जसवाट बिशालग्रुप प्रचण्ड सरकारवाट रुष्ट वनेको थियो।

- वाँसवारी छालाजुत्ता काण्डः

बिनोद चौधरीको भाईलाई हिरासतमा लिई कारवाही अगाडी वढाएको हाल सो जग्गा सार्वजनिक कायम भएको छ ।

- वालुवाटार ललिता निवास जग्गा काण्डः

११३ रोपनी भन्दा वढी जग्गा रहेको देशकै मुटुमा रहेको प्रधानमन्त्री निवास वालुवातारको जग्गा लामोसमयदेखी अतिक्रमित अवस्थामा थियो तर दोषिलाई कारवाही गर्न सकेको अवस्था थिएन तर जब प्रचण्ड नेतृत्वको सरकारले विशेष अदालतमा मुद्दा दर्ता गरेर यो काण्डलाई माठी उकास्यो र वालुवाटारको विवादित जग्गा सरकारी घोषणा अदालतवाट गराउन सफल भयो,मिनवहादुर गुरुङ लगायत शक्तिसाली ब्यक्तिहरुलाई समेट पक्राउ गर्न सफल भएको थियो । जुन सुशासनको पक्ष थियो । यो प्रकरणमा ६५ जना भन्दा वढी ब्यक्तिको नाममा दर्ता भएको जग्गा सरकारी कायम गर्ने निर्णय भएको थियो ।

४) सुनतस्कर लाई कारवाहीः

विगतमा सुन समातिएपनि केहि दिनपछी पित्तल भएको समाचार हामिले नसुनेको होईन तर गृहमन्त्री नारायण काजी श्रेष्ठ हुँदा पाजिहरुलाई ठेगान लगाई १०० किलो भन्दा माठी सुन पक्राउ गरि कारवाही अगाडी वढाएको छ । त्यस्तै धेरै ब्यक्तिहरुलाई कारवाहिको दायरामा ल्याएको थियो । जसले जनतामा सुशासनको प्रत्याभूति दिलाएको थियो ।

५) पुर्जा वितरण :

नेकपा(माओवादी केन्द्र)का नेता शशी श्रेष्ठ भुमी,ब्यवस्था गरिबी निवारण मन्त्री हुँदा देशैभरी २५ हजार घर परिवारलाई जग्गा धनी प्रमाण पुर्जा वितरण भएको थियो । मध्यपुर थिमि नगरपालिकामा मात्रै त्यसताका २६०० वटा भन्दा वढी पुर्जा वितरण भएको थियो । यो सुशासनको उदाहरण हो । तर अहिले यो कार्य अगाडी वढेको अवस्था देखिदैन ।

६) सुराकी खर्च खारेज

गृहमन्त्रालयको सुराकी खर्च खारेज-नारायण काजी श्रेष्ठवाट आफ्नो गृहमन्त्रीत्व कालमा गृहमन्त्री र गृहसचिवको तजविजमा मासिक करोडौं रुपैयाँको दरले खर्चिन पाउने सुराकी खर्च आफ्नो कार्यकालमा हटाएको थियो जुन भ्रष्टाचार बिरोधी सदाचारको पक्षमा निर्णय भएको थियो ।

७) मितरब्याजी पिडितलाई न्यायः

मिटरब्याजी पिडितलाई न्याय तथा पिडकलाई कारवाहिका लागि ऐन जारी गरि हजारौं पिडितको जग्गा फिर्ता गरिएको ।

८) लोडसेडिङको अन्त तथा

**बाँकी पेज ५ मा**



# इजरायल-हिजबुल्लाह युद्धविराम नजिक

एजेन्सी । इजरायल र लेबनानस्थित अतिवादी संगठन हिजबुल्लाहबीच अमेरिकी मध्यस्थतामा भएको 'युद्धविराम सम्झौता'को मस्यौदामा इजरायली वार क्याबिनेटले मंगलबार मतदान गर्ने भएको छ ।

इजरायली प्रधानमन्त्री बेन्जामिन नेतान्याहुले यस सम्झौतालाई सैद्धान्तिक सहमति दिइसकेको फर्स्ट पोस्टले जनाएको छ । यो सम्झौता दुई महिनाको युद्धविरामबाट हुन्छ, जसअन्तर्गत इजरायली सेना दक्षिण लेबनानबाट फिर्ता हुनेछन् र हिजबुल्लाहले लितानी नदीको दक्षिणी सीमामा आफ्नो सशस्त्र उपस्थिति हटाउनेछ ।

युद्धविराम सम्झौताको कार्यान्वयनपछि यस क्षेत्रमा लेबनानी सेना र पहिलेबाट तैनाथ संयुक्त राष्ट्रसंघीय पर्यवेक्षक सेनाले संयुक्त रूपमा सुरक्षा दिनेछन् । साथै, लेबनानी नागरिकलाई उनीहरूले युद्धका कारण छोडेका गाउँघरमा फिर्ता जाने अनुमति हुनेछ ।

सम्झौता कार्यान्वयनको निगरानी गर्न एउटा अन्तर्राष्ट्रिय समिति गठन हुनेछ, जसलाई अमेरिकाले नेतृत्व गर्ने बताइएको छ । फ्रान्स पनि यो प्रक्रियामा सहभागी हुनेछ । तर, इजरायल र लेबनानबीच समिति गठनका विषयमा मतभेद देखिएको छ । इजरायलले फ्रान्सलाई विश्वास नगरेको बताएको छ भने लेबनानले बेलायतलाई यस समितिमा सामेल गर्न अस्वीकार गरेको अन्तर्राष्ट्रिय सञ्चारमाध्यमहरूले जनाएका छन् ।

सम्झौतामा हिजबुल्लाहलाई हतियार उत्पादन र खरिदमा कडाइ गर्ने शर्त लगाइएको छ । जसका लागि लेबनान सरकारले निगरानी गर्ने प्रतिवद्धता जनाएको छ । इजरायलले भने आफूले तत्काल खतराको संकेत देखेमा लेबनानमा कारवाही गर्ने अधिकार चाहेको छ भने लेबनानले त्यसले आफ्नो सार्वभौमसत्तामाथि आँच पुऱ्याउने भन्दै अस्वीकार गरेको छ ।

यस सम्झौताबारे नेतान्याहुले लडाइँको अन्त्य नै नभएको तर अस्थायी युद्धविराम भएको प्रतिक्रिया दिएका छन् । कतिपय इजरायली अधिकारी र नागरिकले यो सम्झौतामा असन्तुष्टि व्यक्त गरेका छन् । राष्ट्रिय सुरक्षा मन्त्री इतामार बेन गभिरले यसलाई 'ऐतिहासिक गल्ती' भनेका छन् ।

अधिकांश इजरायली नागरिकले हिजबुल्लाहलाई पूर्णरूपमा समाप्त नगरी सम्झौता गर्नु उचित नहुने प्रतिक्रिया सामाजिक सञ्जालमा व्यक्त गरेका छन् । युद्धविरामले लेबनान र इजरायलको सीमा क्षेत्रमा केही समयका लागि शान्ति ल्याउन सक्नेछ । तर, यो सम्झौताले गाजा क्षेत्रमा इजरायल-हमास संघर्षमा के असर पार्नेछ, अझै स्पष्ट छैन ।

केही कूटनीतिज्ञहरूले अहिले सम्झौता नभएमा यो द्वन्द्व सिरिया र इराकसम्म फैलन सक्ने चेतावनी दिएका छन् । संयुक्त राष्ट्रसंघका सिरियाका विशेष दूत गियर पेडरसनले गाजा र लेबनानमा युद्धविराम आवश्यक रहेको र यसले सिरियालाई द्वन्द्वमा तानिनबाट रोक्न सक्ने बताएका छन् ।

# कोप-२९ सम्झौताबाट धनी देश पछि

एजेन्सी - गरिब राष्ट्रहरूले अपमानजनक भन्दै आलोचना गरेको कोप-२९ सम्झौता वास्तवमै अपूर्ण रहेको र यसको कारण धनी देश रहेका अध्यक्ष मुख्तार बाबायेभले बताएका छन् । यस्तो परिणामका लागि उनले धनी मुलुकहरूलाई दोष लगाएका छन् ।

अजरबैजानको कोप-२९ नेतृत्वले संयुक्त राष्ट्र जलवायु वार्ताहरूमा कठिन सङ्घर्षपूर्ण वित्तीय सम्झौता 'अपूर्ण' थियो भन्ने कुरा स्वीकार गरेको हो । आइतबार सहमति भएको विवादास्पद सम्झौताले धनी प्रदूषणकारीहरूले विकासोन्मुख देशहरूलाई उत्सर्जन कम गर्न र बढ्दो खतरनाक जलवायु परिवर्तनका प्रभावहरूका लागि तयार हुन वार्षिक तीन खर्ब डलरको प्रतिबद्धता गरेका थिए ।

कोप-२९ का अध्यक्ष मुख्तार बाबायेभले बढ्दो आवश्यकताहरू पूरा गर्न सम्झौता अपर्याप्त भएको स्वीकार गरेका हुन् । चीन थप नगद जम्मा गर्न सहमत हुने अवस्था रहे पनि अन्य धनी देश पछि हट्दा परिणाम निराशाजनक भएको उनको भनाइ छ ।

सोमबार बेलायतको गार्जियन अखबारमा लेख्दै उनले वार्ता प्रक्रियामा धेरै ढिलो नभएसम्म धनी ऐतिहासिक उत्सर्जकहरू 'अटल' रहेको बताए । 'यो सम्झौता अपूर्ण हुनसक्छ । यसले सबैलाई खुशी पार्दैन । तर यो सन् २०१५ मा पेरिसमा घोषित एक खर्ब डलरको तुलनामा ठूलो कदम हो', उनले भने, 'यो त्यस्तो सम्झौता हो - जुन लगभग हुन सकेन ।'

तेल र ग्यास निर्यातकर्ता अजरबैजानले कोप-२९ विशेष गरी फ्रान्स र जर्मनीबाट व्यवस्थापनका लागि कडा आलोचना भोग्नुपरेको छ । बाबायेभले झण्डै दुई हप्तासम्म चलेको कटु वार्ताहरूको एक पटक भत्किने अवस्थामा पुगेको सम्झौतालाई आइतबार बिहानको समयमा पारित गराएका थिए ।

सम्झौता स्वीकृत भए लगत्तै भारत, बोलिभिया, नाइजेरिया र मलावीले ४५ सदस्यीय अल्पविकसित देशहरूका तर्फबाट बोलेर यसको निन्दा गरे । सन् २०३५ सम्ममा नयाँ लक्ष्य हासिल गर्न बाकुको खेलकुद स्टेडियममा भेला भएका लगभग २०० राष्ट्रका लागि वित्त सँधै जटिल विषय बन्न गइरहेको थियो । धनी देशहरू समयमै अघिल्लो लक्ष्य पूरा गर्न असफल हुँदा संयुक्त राष्ट्र जलवायु प्रक्रियामा विश्वासलाई बिगारेको छ । कोप-२९ ले विकासोन्मुख राष्ट्रहरूलाई ऊर्जा सङ्क्रमणका लागि भुक्तान गर्न र बढ्दो जलवायु प्रभावहरूका लागि आफूलाई तयार पार्न मद्दत गर्न सन् २०३५ सम्म प्रतिवर्ष १३ खर्ब डलरको व्यापक लक्ष्य राखेको छ ।

यो सम्झौताले धनी राष्ट्रहरूले परिचालन गरेको तीन खर्ब डलरलाई निजी क्षेत्र र विश्व बैंकजस्ता वित्तीय संस्थाहरूबाट प्राप्त कोषसँग मिलाएर यो ठूलो रकममा पुग्ने परिकल्पना गरेको छ । तर बाबायेभले भने, ' औद्योगिक विश्वको योगदान धेरै कम थियो र निजी क्षेत्रको योगदान धेरै सैद्धान्तिक थियो भन्ने विकासोन्मुख राष्ट्रहरूसँग म सहमत छु ।'

युरोपेली सङ्घ र संयुक्त राज्य अमेरिकाजस्ता धनी ऐतिहासिक उत्सर्जकहरूसँग वार्तामा चीनको संलग्नताको तुलना गर्दै उनले बेइजिङ 'अरूले पनि त्यसो गरे भने थप प्रस्ताव गर्न इच्छुक छ तर अरूले गरेनन्' भने । विश्वको दोस्रो ठूलो अर्थव्यवस्था र हरित गृह ग्यासहरूको शीर्ष उत्सर्जक चीनलाई संयुक्त राष्ट्रको प्रक्रियामा एक विकासशील देश मानिन्छ र त्यसैले भुक्तान गर्न बाध्य छैन ।

यद्यपि यसले पहिले नै आफ्नै सर्तहरूमा जलवायु कोष प्रदान गर्दछ । नयाँ पाठले विकसित राष्ट्रहरूले 'अगुवाई लिनेछन्' भन्ने बताउँछ तर अन्य देशहरू पनि सामेल हुन सक्छन् भन्ने सङ्केत दिन्छ ।

बाबायेभले भने, 'यो सम्झौता 'पर्याप्त छैन', तर भोलिको ब्राजिलमा हुने जलवायु वार्ताहरूमा निर्माण गर्न एक आधार प्रदान गर्नेछ ।'

## थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### सरकारी कामकाजमा हुने विसङ्गति रोक्न आवश्यक !

नेपाल सरकारको केन्द्रिय प्रशासन रुपमा रहेको सिंहदरबार परिसर र देशका विभिन्न जिल्लाहरुमा रहेको सरकारी कार्यालयहरुमा थुपारेर राखिएका मोटरहरू सरकारले कबाडीका रूपमा लिलाम गर्ने तयारी गरेको छ। तीमध्ये कतिपय सवारी साधन सामान्य मर्मतबाट पुनः सञ्चालन गर्न सकिन्छ भने धेरैलाई विद्युतीय सवारीमा परिणत गर्न सकिन्छ।

पश्चिम नवलपरासीको जिल्ला वन डिभिजन कार्यालय परिसरमा थुपारिएका एक करोड ँभन्दा बढी मूल्यका काठ सड्न लागेको छ। त्यहाँ थुपारिएका १ लाख ५० हजार क्युबिक फिट सालका काठ विक्री हुन नसकेपछि कुहिन लागेको हो।

सञ्चार माध्यममा आएका यी दुवै समाचारले नेपालको सरकारी निकायको काम गराइको पोल खोल्छ। सरकारले न ती गाडीलाई विद्युतीय सवारीमा परिणत गर्न ध्यान दियो न कुहिन लागेको काठ सस्तो मूल्यमा भए पनि बेच्न सक्यो। यस प्रकारको अवस्था देशैभर रहेका सरकारी कार्यालयमा छ।

विभिन्न सरकारी कार्यालयमा थन्क्याएर राखिएका पुराना मोटरहरू कतिपय सामान्य मर्मत सम्भारबाटै चलाउन सकिने नसकिएकालाई विद्युतीय सवारी साधनमा परिणत गरेर नयाँ किन्ने पैसा जोगाउन पनि सकिन्छ। तर नेपाल सरकारको सरोकारवाला निकाय यस विषयमा मौन छ। किनकी ती सम्पत्ति सरकारको हो। जसको सम्वन्धमा कसैलाई कुने सरोकार छैन।

लिलाम गर्दा कसैले पनि नकिनेपछि पश्चिम नवलपरासीमा मूल्यवान् सालका काठ सड्न लागेको रहेछ। सालको मूल्य धेरै तोकिएको र फर्निचरको विक्री मन्द भएकाले व्यवसायीले काठको लिलामीमा भागै नलिएका रहेछन्। मूलतः अनुदार मानसिकताबाट बनाइएका नियमहरूले सार्वजनिक सम्पत्ति बेचबिखन वा दानदातव्य गर्ने बाटो धेरै साँगुरो बनाएका छन्। यस्तै, काम नगरे सजाय नहुने तर काम गर्दा जोखिम धेरै हुने नियमकानुन र प्रचलनले कर्मचारीलाई 'कामचोर' बन्न प्रेरित गर्छन्।

कुनै वस्तु खेरै जान लाग्यो भने जति सकिन्छ त्यति जोगाउनु बुद्धिमानी मानिन्छ। यस्तै सकेसम्म भएकै वस्तुबाट काम चलाउनु मितव्ययिता हो। यस्ता युक्ति सरकारले पनि अपनाउने हो भने राज्यको ठूलो व्ययभार कम हुनेथियो। नेपाल सरकार भने प्रायः 'बुद्धिको शत्रु' देखिने गरेको छ। कर्मचारीहरू जोगाउन सकिने वस्तुलाई जतन गरेर काममा ल्याउनुभन्दा खेर जान दिन सजिलो मान्छन्। नियम कानुन नै भएको फालेर नयाँ किन्न सजिलो हुनेगरी जो बनाइएको छ।

सिंहदरबार परिसरमा थुपारिएका थोत्रा मोटरहरू वा पश्चिम नवलपरासीको वन डिभिजन कार्यालय परिसरमा कुहिन लागेका काठ प्रतिनिधि उदाहरण हुन्। सरकारी कामकाजमा यस्ता विसङ्गति थुप्रै देखिने गरेको छ।

यस्ता विसङ्गति बदल्न राजनीतिक नेतृत्व गम्भीर र सजग दुवै हुनुपर्छ। कुनै नियम कानुनले सड्न लागेको काठ सस्तो दाममा बेच्न वा पुराना मोटर विद्युतीय सवारीका परिणत गर्न रोक्छ भने त्यसलाई बदल्न अग्रसर हुने दायित्व राजनीतिक नेतृत्वकै हुन्छ।

# सरकारी जग्गाः सके दर्ता गरेर लैजाने, नत्र सस्तोमा लिजमा लिएर कब्जा गर्ने !

● अनुसा थापा

राजनीतिक पहुँचको आडमा जे गर्नपनि छुट ? सरकारले तोकेको जग्गाको मूल्य लाखमा छ तर यहाँ खरिदबिक्री हुन्छ, करोडौंमा। सरकारले काठमाडौं महानगरपालिका-२६ भित्र पर्ने एरियामा जग्गाको मूल्य ४३ लाख ६० हजार रुपैयाँ आना कायम गरेको छ। तर, यो एरियामा जग्गा आनाको एक करोडदेखि १० करोडसम्म खरिदबिक्री हुन्छ।

राजनीतिक दलको पहुँचमा केही बाठाटाठाले सरकारी जग्गामा मोज गरिरहेका छन्। गोंगबुको नयाँ बसपार्कस्थित १६१ रोपनी जग्गा सरकारको छ। त्यो जग्गा हाल ल्होत्से सहकारीको कब्जामा छ। सहकारीको अध्यक्ष दीपक कुँवरले सस्तो रकममा सो जग्गा भाडामा लिएका छन्। जग्गा नेपाल सरकारको भएपनि नयाँ बसपार्क जापान सरकारले बनाइदिएको हो।

कुँवरले मासिक चारदेखि पाँच करोड आम्दानी गर्छन्। बसपार्कभित्र भवन बनाएर भाडामा लगाइएको छ। बसपार्कभित्र छिर्नेबित्तिकै गाडी चालकसँग रकम असुलिन्छ। यता, टिकट काटेबापत पनि ल्होत्सेले आम्दानी गर्छ। एउटा सटरबाट मासिक २० हजारदेखि तीन लाखसम्म ल्होत्सले भाडा उठाइरहेको छ।

बसपार्कभित्र प्रवेश पाउनका लागि लोकल गाडीले तीन सय र ठूला गाडीले एक हजार रुपैयाँ तिर्नुपर्छ। पार्किङ्गबापत पनि ल्होत्सले मनोमानी पैसा असुल्दै आएको छ। यात्रुले टिकट काटेको पैसाबाट ३० प्रतिशत कमिशन ल्होत्सेले लिन्छ। टिकट काट्ने काउण्टरहरु पाँच लाखदेखि १५ लाखसम्म खरिदबिक्री हुने गरेको छ।

सरकारको १६१ रोपनीमध्ये अधिकांश जग्गा हिनामिना भइसकेको छ। ३०-३५ रोपनी जग्गा व्यक्तिको नाममा गएको बताइन्छ। ६५ रोपनीमा बसपार्क सञ्चालन भएको छ। बचेको जग्गामा ल्होत्सेले भवन ठड्याएर दरो आम्दानी गरिरहेको छ। बसपार्क सञ्चालन गरेको बापत ल्होत्सेले काठमाडौं महानगरपालिकालाई वार्षिक एक करोड १० लाख रुपैयाँ तिर्छ।

ल्होत्सेले बसपार्क सञ्चालनका निम्ति महानगरसँग ४५ वर्षको सम्झौता गरेको छ। तर, कानुनले त त्यो दिँदैन्। यति लामो समय एउटै व्यक्तिलाई कसरी बसपार्क सञ्चालन गर्ने ठेक्का दिइयो ? दालमा केही कालो भएको निश्चित छ। मुलुकमा कोरोना महामारी भित्रिएपछि सरकारले दुईपटक लकडाउन गर्यो।

२०७६ चैत ११ गते पहिलोपटक र २०७८ वैशाख १६ गते दोस्रोपटक लकडाउन भयो। ल्होत्सेले महानगरलाई लकडाउनको अवधिको भाडा तिरेन्। महानगरले पनि भाडा छुट गरिदियो। ल्होत्सेका अध्यक्ष कुँवर ठूलो राजनीतिक पहुँच भएको व्यक्ति हुन्। अस्पताल, शैक्षिक संस्था, अपार्टमेण्ट, जग्गा प्लानिङ्ग, निर्माणलगायत हरेक क्षेत्रमा उनले हात हालेका छन्।

राजनीतिक आडमा उनले आफ्नो धन्दा चलाएका छन्। उपत्यकाका अधिकांश जग्गा प्लानिङ्ग गर्ने उनी नै हुन्। २०५४ सालमा महानगरका मेयर केशव स्थापित हुँदा ल्होत्सेसँग बसपार्क सञ्चालनका निम्ति सम्झौता गरियो। यति लामो समय एउटैलाई ठेक्का दिने स्थापित नै हुन्।

काठमाडौंभित्र जग्गाको मूल्य करोडौंमा खरिदबिक्री हुन्छ। त्यसैले सरकारी, गुठी, सार्वजनिक जग्गातर्फ धेरैको आँखा गएको छ। कतिपयले सस्तो मूल्यमा सरकारी जग्गा लिजमा लिएर रजाइँ चलाएका छन् भने कतिपयले दर्ता गरेरै लगिसकेका छन्। सुन्दापनि अचम्म लाग्ने बाठाटाठाले गुठी संस्थानको नाममा भएको जग्गामा घर बनाएर भाडामा लगाएका छन्।

त्यसबापत उनीहरुले मासिक करोडौं भाडा असुल्छन् तर गुठी संस्थानलाई वर्षको जम्मा एक-दुई पाथी धान बुझाउँछन्। त्यतिमै गुठी संस्थानले चित्त बुझाइरहेको छ। गुठीको जग्गा राज्यको सम्पत्ति हो। संस्थानले खैचेर त्यहाँबाट पैसा उठाउन सक्ने हो भने राज्यको ढुकुटीमा कति राजश्व जम्मा होला ?

विडम्बना, सरोकारवालाको यस्तो काममा ध्यान जाँदैन्। काठमाडौं महानगरको मेयर बालेन साहको राष्ट्रियस्तरमा मात्र भई अन्तर्राष्ट्रिय स्तरमा पनि चर्चा छ। बालेनलाई देशविदेशमा चिनिन्छ। अन्य मेयरले गर्न नसकेको धेरै काम उनले गरेर देखाइदिए। तर, उनले ल्होत्सेसँग भएको सम्झौता तोड्न सकेनन्।

ल्होत्सेसँग भएको सम्झौता तोडेर अन्यलाई ठेक्का दिने हो भने मासिक तीन-चार करोड राज्यको ढुकुटीमा जम्मा हुन्छ। मुलुकको सबैभन्दा पुरानो विमानस्थल त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल बनेको जग्गा पशुपति गुठीको नाममा छ। गुठीले कौडीको भाउमा जग्गा भाडामा दिएको छ।

एयरपोर्टदेखि पार्किङ्ग, होटल, सटर जम्मै पशुपति गुठीको जग्गामा बनेको छ। तर, गुठीले के पाएको छ ? व्यक्तिहरुले त्यहाँ मासिक करोडौं उठाउँछन्। गुठी हेरेको हेर्यै। महानगरभित्र भएका सरकारी, गुठी, सार्वजनिक जग्गा खोज्न अब बालेन तात्नुपर्छ। हामी नेपाली कसैले सानो काम गरिदिनेबित्तिकै उनको गुनगान गाउन थाल्छौं।

त्यो उसको कर्तव्य हो भन्ने सोच्दैनौं। विगतका मेयरले केही नगरेकोले अहिले बालेनको पक्षमा धेरै उभिएका हुन्। उनले नगरेका होइनन्, गर्दै छन्। अब उनले सरकारी सम्पत्तिमा रजगज चलाउनेहरुलाई ठेगान लगाउन आवश्यक भइसकेको छ। सरकारी सम्पत्तिको दुरुपयोग गर्ने नेकपा एमाले, नेकपा माओवादी केन्द्र र नेपाली काँग्रेस हो।

यी दुई पार्टीका कार्यकर्ता सरकारी सम्पत्तिमा डेरा जमाएर बसेका छन्। आफ्नो कार्यकर्ता पोस्नका लागि कौडीको भाउमा जग्गा लिजमा दिने यिनीहरु हुन्। यता, सरकारी जग्गा सुकुम्बासीको नाममा हुकुम्बासी ल्याउने कब्जा गराउने श्रेय पनि यिनीहरुलाई नै जान्छ। जति पनि सुकुम्बासी बनेर खोला किनार छेउछाउ बसेका छन्, ती जम्मै एमालेका कार्यकर्ता हुन्।

त्यही भएर त एमाले अध्यक्ष केपी शर्मा ओली माओवादीका अध्यक्ष पुष्पकमल दाहालको सरकार हुँदा भन्दै थिए,'खोला किनारको जग्गा सुकुम्बासीलाई दिए भइहाल्यो नि।' त्यति नै माया लाग्छ भने आफ्नो व्यक्तिगत सम्पत्ति दिए भइहाल्यो नि। किन सरकारी सम्पत्तिमा आँखा लगाउनुपर्यो ?

राजनीतिक दलहरुले सरकारी सम्पत्ति आफ्नो निजीझैं गरिरहेका छन्। भोटका लागि सरकारी सम्पत्तिको चरम दुरुपयोग भएको छ। कतिपय पार्टी कार्यालय सरकारी जग्गामै बनेको छ। कर्मचारीको संघसंगठनले पनि सरकारी जग्गा कब्जा गरेका छन्। विद्यार्थी संगठनहरुले पनि सरकारी जग्गामै घर बनाएका छन्।

अरु त के कुरा गर्नु, प्रधानमन्त्री स्वयंले सरकारी जग्गा व्यक्तिको नाममा पास गर्न मन्त्रिपरिषद्बाट निर्णय गर्छन्। ओली प्रधानमन्त्री हुँदा भूमि व्यवस्थामन्त्री पद्मा अर्याल थिइन्। २०७८ वैशाख ७ र १३ गते झापाको गिरीबन्धु टी-स्टेटको जग्गा व्यक्तिको नाममा पास गर्ने निर्णय गर्ने यी दुई नै हुन्।

देशका राजनीतिक दलहरु नै भूमाफिया छन्। हामी देश बनाउँछौं भनेर सरकारी सम्पत्तिको दोहन गर्दैछन्। नेतादेखि कार्यकर्ता, व्यापारीदेखि सरकारी कर्मचारी जम्मैको आँखा सरकारी जग्गामै छ। सके दर्ता गरेर लगौं, नसके सस्तोमा लिएर मोज गरौं। जसरी हुन्छ सरकारी सम्पत्तिको दोहन गरौं, गरौं।

अनि यस्ता व्यक्तिले हामी समाजसेवी। राष्ट्रका लागि काम गर्छौं भन्दै भाषण ठोक्छन्। योभन्दा हाँस्यास्पद कुरा के होला ? देशमा भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्रालय छ। विभाग छ। स्थानीय पालिका छन्। तर, कसैको ध्यान सरकारी सम्पत्ति खोज्नतिर छैन्।

कानुन व्यवसायी, भूमाफियाहरुले २०२१ र २०३२ सालमा आफ्नो जग्गा नाप्न छुटेको भन्दै सरकारी जग्गा व्यक्तिको नाममा लगिसकेका छन्। यहाँ त खोलानाला पनि दर्ता हुन्छ। मन्त्रिपरिषद्ले दुईपटकको नापीपछि गरिएको जग्गा दर्ता खारेज गरिदिने हो भने व्यक्तिको नाममा गएको सरकारी जग्गा सरकारको नाममा आउँछ।

भक्तपुर

# न्यूजील्याण्ड संसदमा आदिवासी सांसदहरूको विरोध: आदिवासी अधिकारका लागि विश्वब्यापी सन्देश

डा. विधुप्रकाश कायस्थ

१४ नोभेम्बर २०२४ मा न्यूजील्याण्डका माओरी सांसदहरूले संसद भित्र शक्तिशाली र भावनात्मक विरोध प्रदर्शन गरेका थिए। त्यहाँ उनीहरूले वेटाङ्गी सन्धिको व्याख्यामा परिवर्तन ल्याउने विवादास्पद विधयेकको विरोधमा हाका प्रदर्शन गरेका थिए। यो सन्धि माओरी जनजाति र ब्रिटिश क्राउन बीचको ऐतिहासिक सम्झौतास्वरूप रहेको छ। संसदको कार्यबाही अस्थायी रूपमा रोकिएको थियो। हाकाको प्रदर्शनले माओरी अधिकार र न्यूजील्याण्डको पहिचानमा वेटाङ्गी सन्धिको महत्वको कडा सन्देश पठायो।

वेटाङ्गी सन्धिस् आओटियराओको इतिहासको आधार

सन्१८४० मा हस्ताक्षर भएको वेटाङ्गी सन्धिआधुनिक न्यूजील्याण्डको स्थापना दस्तावेजको रूपमा मानिन्छ। यसले माओरी जनजाति ९इवी० र ब्रिटिश क्राउन बीचको सम्बन्ध स्थापना गर्यो । सन्धिको उद्देश्य माओरीहरूको भूमी, स्रोत र संस्कृतिका अधिकारलाई सुनिश्चित गर्नुका साथै ब्रिटिश संप्रभुत्वको स्थापना पनि गर्नु थियो।

तरवर्षौंदेखि, यस सन्धिको व्याख्या र लागू गर्ने तरिका विवादको विषय बनेको छ। धेरै माओरीहरूले महसुस गरेका छन् कि उत्ताराधिकारी सरकारहरूले सन्धिको वचनलाई गलत रूपमा व्याख्या गरेका वा बेवास्ता गरेकाले कारण दीर्घकालीन गुनासो उत्पन्न भएका छन्।

वेटाङ्गी सन्धिको कानूनी व्याख्यामा परिवर्तन ल्याउन खोजेकोयो विधयेकमाथिमाओरी सांसद र कार्यकर्ताहरू बीच चिन्ता उत्पन्न गर्यो। यस परिवर्तनलाई सन्धिको मूलभूत सिध्दान्तहरूको विरुध्दको कदम र न्यूज़ील्याण्डको आधुनिक कानूनी परिप्रेक्ष्यमा यसको महत्वलाई कमजोर पार्ने प्रयासको रूपमा हेरिएको छ।

शक्ति प्रदर्शनस् हाका

गत १४ नोभेम्बर २०२४ मान्यूजील्याण्डका माओरी सांसदहरूले संसद भित्र शक्तिशाली र भावनात्मक विरोध प्रदर्शन गरेर वेटाङ्गी सन्धिको व्याख्यामा परिवर्तन ल्याउने विवादास्पद विधयेकको विरोधमा हाका प्रदर्शन गरेका थिए। यो सन्धि माओरी अधिकार र न्यूजील्याण्डको पहिचानको केन्द्रमा रहेको एक आधारभूत सम्झौता हो। बाईस बर्षिया सांसद हन्ना(राहिती माईपी( कोर्कले हाकाकोनेतृत्व गरिन्। हाका हुदै गर्दा संसदको कार्यबाही अस्थायी रूपमा रोकिदियो। यसले वेटाङ्गी सन्धिको निरन्तर महत्व र माओरी अधिकार र न्यूजील्याण्डको राष्ट्रिय पहिचानको निर्माणमा यसको केन्द्रीय भूमिकाबारे बलियो सन्देश दिएको छ।

हाकाप्राय: शक्ति, एकता र विरोधको प्रदर्शनका रूपमा प्रयोग एक परम्परागत माओरी युध्द नृत्य हो। यस अवसरमा यो एक राजनीतिक प्रतिरोधको कार्य थियो। सांसद माईपी(कोर्कले संसद कक्षमा उभिएर विधयेकको एक प्रति चिरफार गरेर हाका गाइन्।उनको आवाज पूर्ण तीव्रतासाथ गुञ्जियो। उनका कार्यहरूलेसदनमा उपस्थित व्यक्तिहरूको ध्यान खिच्नका साथै विश्वभरिका प्रत्यक्ष प्रसारण हेरी रहेका दर्शकहरूलाई पनि आकर्षित गर्यो। विरोधमा विपक्षी दलका सांसद र दर्शकदिर्घाका दर्शकहरूले पनि सामेल भए। सबैले हाकामा आफ्नो आवाज समावेश गरे।

विरोधका लागि चयन गरिएको हाका "का माते" थियो, जसलाई माओरी मुखिया ते राउपराहाले १८२० को आसपास रचना गरेका थिए। यो हाका माओरी परम्परामा सबैभन्दा प्रख्यात मध्ये एक हो र न्यूजील्याण्डको रग्बी टोली,"आल ब्ल्याक्स" द्वारा म्याच अघि प्राय: प्रदर्शन गरिन्छ। तल "का माते" हाकाको मूल माओरी संस्करण र यसको अंग्रेजी अनुवाद दिइएको छस्

का माते (मूल माओरी संस्करण)
का मते! का मते!
का ओरा! का ओरा!
का मते! का मते!
का ओरा! का ओरा!
तेनेइ ते ताङत ता पुहुरुहु
नाना इ तिकी माई हकाव्हिति ते रा
उपाने! उपाने!
उपाने, काउपाने!
विटी ते रा!

नेपाली अनुवाद
यो मृत्युदेखि! यो मृत्युदेखि!
यो जीवन हो! यो जीवन हो!
यो मृत्युदेखि! यो मृत्युदेखि!
यो जीवन हो! यो जीवन हो!
यो केशदार पुरुष हो
जसले सूर्यलाई चम्काउन ल्याएको हो!
एक कदम माथि, अर्को कदम माथि!
एक कदम माथि, अर्कोमाथि
सूर्य चम्कन्छ!

माईपी(कोर्क र उनका सहकर्मीहरूले विरोधको यस क्षणमा हाकाको आवाहन गरेर केवल वेटाङ्गी सन्धिको व्याख्यामा प्रस्तावित परिवर्तनको विरोध जनाएनुका साथै माओरी संस्कृतिको शक्ति र लचीलोपनको पुनस् पुष्टि पनि गरे।

एक प्रतीक र क्रियाकलापको आह्वानको रूपमाहाकालेक्षणको भावना समेट्यो र माओरी सांसदहरूको सन्देशलाई सन्धिका अधिकारहरूको रक्षा गर्ने प्रतिबद्धताका साथदृढतापूर्वक प्रस्तुत गरे।विरोधको क्रममा विपक्षी दलका सांसदहरूले हाकामा सामेल भए। साथै दर्शकदिर्घाले समर्थनमा आवाज उठायो।

हन्ना(राहिती माईपी(कोर्कको भूमिका

एक प्रमुख माओरी २२ बर्षिय सांसदहन्ना(राहिती माईपी(कोर्कविरोध र हाकालाई नेतृत्व गर्ने प्रमुख व्यक्ति थिइन्। माओरी मुद्दामा उनको दृढ वकालतका लागि परिचित माईपी(कोर्कको नेतृत्व यस विरोधमा उनलाई माओरी अधिकारको मुखर रक्षकको रूपमा थप बलियो बनाएको छ। हाकाको दौरान विधयेकको प्रति च्यात्ने कार्य एक शक्तिशाली विरोधको प्रतीक बन्यो।यसले माओरी समुदायको न्याय र पहिचानको लागि निरन्तर संघर्षलाई प्रतिध्वनित गर्योक।

प्रतिक्रिया र प्रभाव

हाका विरोधले न्यूजील्याण्ड र अन्तर ाष्ट्रिय स्तरमा व्यापक ध्यान आकर्षित गर्यो। यसले वेटाङ्गी सन्धि र माओरी अधिकारको बहसलाई पुनस् राष्ट्रिय केन्द्रबिन्दुमा ल्यायो। विरोधको नाटकीय प्रकृतिर विधयेकलाई च्यात्ने प्रतीकात्मक क्रियाले धेरै माओरी र गैर(माओरीहरूलाई गहिरो तरिकाले प्रभावित गर्नुका साथै सन्धिको निरन्तर महत्त्व र यसको सिद्धान्तहरूलाई सम्मान गर्ने आवश्यकता बारे बहस सुरू गर्योन।

विरोधले न्यूजील्याण्डको राजनीतिक परिप्रेक्ष्यमा माओरीहरूको सामाना गर्दै आएका चुनौतीहरूको उजागर पनि गर्योन। सन्धि माओरी अधिकार र संप्रभुत्वको एक महत्वपूर्ण अंश भए तापनि, यसमा भएका विवादहरूको समाधान अझै पुरा हुन सकेको छैन। प्रस्तावित विधयेकको आलोचकहरूले यसलाई माओरी स्वनिर्णयलाई कमजोर बनाउन र माओरी भूमि, संस्कृति र भाषाको संरक्षणलाई धक्का पुर्यानउने कदमका रूपमा हेरिरहेका छन्।

एकता र एकजुटताको क्षण

गत १४ नोभेम्बरको हाका विरोध केवल एक प्रदर्शन होइनयो माओरी समुदायको एकता र एकजुटताको क्षण थियो। यसले सरकार र जनतालाई माओरी संस्कृति र माओरी अधिकारको लागि लडाइँको निरन्तर शक्ति सम्झायो। विरोधले वेटाङ्गी सन्धिको महत्वलाई अझै विशेष बनायोजसले न्यूजील्याण्डको भविष्यलाई आकार दिन्छ।

## रातो रङको पिसाब आउनु क्यान्सरको संकेत त होइन ?

डा. समिम अख्तर

पिसाबथैलीको क्यान्सर एक जटिल प्रकारको क्यान्सर हो, जुन मूत्राशयको कोषिकाहरूमा सुरु हुन्छ । मूत्राशय भनेको तल्लो पेटमा रहेको खोक्रो मांसपेशी अंग हो जसले पिसाब भण्डार गर्छ । पिसाबथैलीको क्यान्सर मूत्राशयको भित्री भागमा युरोथेलियल नामक कोषिकाहरुमा सुरु हुन्छ। युरोथेलियल कोषिकाहरू मिर्गौला र त्यसलाई म जोड्ने नली (युरेटरहरू)मा पनि पाइन्छ । युरोथेलियल क्यान्सर मिर्गौला र मूत्रनलीमा पनि हुनसक्छ । तुलनात्मक रुपमा मूत्राशयमा यो क्यान्सर साझा रुपमा देखिन्छ । अधिकांश पिसाबथैलीको क्यान्सर प्रारम्भिक चरणमा पहिचान हुन्छ । सुरुमै पत्ता लागे उपचार पनि सम्भव हुन्छ । प्रारम्भिक चरणमा पिसाबथैलीको क्यान्सर सफल उपचार भए पनि रोग पुन: फर्किन सक्छ । जसकारण पिसाबथैलीको क्यान्सर भएकालाई उपचारपछि वर्षौंसम्म फलोअपमा बोलाइन्छ ।

के कस्ता लक्षण देखिन्छ ?

पिसाबमा रगत देखापर्ने, चम्किलो रातो वा गाढा रङको देखिन सक्छ । क्यान्सर भए पनि कहिलेकाहीं पिसाब सामान्य देखिन पनि सक्छ । बारम्बार पिसाब लाग्नु, पिसाब फेर्दा दुख्ने, पोल्ने, ढाड दुख्ने, खाना नरुच्ने र तौल कम हुने जस्ता लक्षण देखिन सक्छ ।

के कारण हुन्छ पिसाबथैली क्यान्सर ?

कुनै कारणवश कोषिकाहरूको डीएनएमा परिवर्तनले (म्युटेसन) पिसाबथैलीको क्यान्सर सुरु हुन्छ । असामान्य कोषिकाहरूले ट्युमर बनाउँछन् जसले शरीरको सामान्य तन्तुलाई आक्रमण गरी नष्ट गर्छ । बिस्तारै असामान्य कोषिकाहरू फुटेर शरीरमा फैलिन (मेटास्टेसाइज) थाल्छन् ।

पिसाबथैली क्यान्सरको प्रकार

युरोथेलियल कार्सिनोमा

युरोथेलियल कार्सिनोमा मूत्राशयको भित्री भागको कोषिकामा हुन्छ । पिसाबथैली भरिएको बेला युरोथेलियल कोषिकाहरू विस्तार हुन्छन् र पिसाबथैली खाली हुँदा संकुचित हुन्छ । यी एउटै कोषिकाहरू मूत्रनली र मूत्रमार्गको भित्री भागमा हुन्छन् । ती ठाउँहरूमा पनि क्यान्सर हुनसक्छ ।

स्कुवामस सेल कार्सिनोमा

स्कुवामस सेल कार्सिनोमा मूत्राशय संक्रमण वा पिसाबथैलीमा पाइप क्याथेटरको लामो समयसम्म प्रयोगले हुनसक्छ । स्कुवामस सेल मूत्राशय क्यान्सर दुर्लभ छ ।

एडेनोकार्सिनोमा

एडेनोकार्सिनोमा कोषिकाहरूमा म्युकस स्रावित ग्रन्थीहरूमा सुरु हुन्छ, जसले मूत्राशयमा बनाउँछन् । मूत्राशयको एडेनोकार्सिनोमा धेरै दुर्लभ छ । केही मूत्राशय क्यान्सरहरूमा एकभन्दा बढी प्रकारका कोषिका समावेश हुन्छन् ।

जोखिम कारक

धुम्रपान : चुरोट पिउनाले पिसाबमा हानिकारक रसायन जम्मा भएर पिसाबथैलीको क्यान्सरको जोखिम बढाउन सक्छ । शरीरले धुवाँमा रहेका रसायनलाई प्रशोधन गर्छ । तीमध्ये केहीलाई पिसाबमा निकाल्छ । यी हानिकारक रसायनहरूले पिसाबथैलीको अस्तरलाई क्षति पारी क्यान्सरको जोखिम बढाउन सक्छ ।

बढ्दो उमेर : उमेर बढ्दै जाँदा पिसाब थैलीको क्यान्सरको जोखिम बढ्छ । यद्यपि यो कुनै पनि उमेरमा हुनसक्छ । धेरैजसो पिसाबथैलीको क्यान्सर भएको पत्ता लागेका व्यक्तिहरू ५५ वर्ष भन्दा माथिका हुन्छन् ।

पुरुषमा बढी जोखिम : महिलाको तुलनामा पुरुषलाई पिसाबथैलीको क्यान्सर हुने सम्भावना बढी हुन्छ ।

रसायन : मिर्गौलाले रक्तप्रवाहबाट हानिकारक तत्व र रसायनहरू फिल्टर गरी पिसाबथैलीमा सार्ने गर्छ । जसकारण केही रसायनहरू वरपर हुनुले पिसाबथैलीको क्यान्सरको जोखिम बढ्छ । मूत्राशयको क्यान्सरको जोखिमसँग जोडिएका रसायनहरूमा आर्सेनिक र रङहरु, रबर, छाला, कपडा र पेन्टहरूमा प्रयोग हुने रसायन छन् ।

क्यान्सर पूर्वको उपचार : एन्टी-क्यान्सर औषधि साइक्लोफोस्फामाइडको उपचारले मूत्राशयको क्यान्सरको जोखिम बढाउँछ । अघिल्लो क्यान्सरका लागि विकिरण उपचार प्राप्त गर्ने व्यक्तिलाई पिसाबथैलीको क्यान्सर हुने उच्च जोखिम हुन्छ ।

पिसाबथैलीमा पटक-पटक संक्रमण : पुरानो वा बारम्बार मूत्र संक्रमण वा सुन्निने, जस्तै पिसाब नलीमा पाइपको (क्याथेटर )को लामो समयसम्म प्रयोगले क्यान्सरको जोखिम बढाउन सक्छ ।

विश्वका केही क्षेत्रमा स्कुवामस सेल कार्सिनोमा स्किस्टोसोमियासिस भनिने परजीवी संक्रमणको कारण हुने पुरानो मूत्राशयको सुजनसँग जोडिएको छ ।

व्यक्तिगत वा पारिवारिक इतिहास : यदि मूत्राशयको क्यान्सर छ भने पुन: हुने सम्भावना बढी छ । यदि रगतका नातेदारहरू, आमाबाबु, भाइबहिनी वा बच्चाको मूत्राशयको क्यान्सरको इतिहास छ भने जोखिम हुनसक्छ । यद्यपि यो परिवारमा मूत्राशयको क्यान्सर हुने सम्भावना दुर्लभ छ ।

लिन्च सिन्ड्रोमको पारिवारिक इतिहास, जसलाई वंशानुगत ननपोलिपोसिस कोलोरेक्टल क्यान्सर पनि भनिन्छ । यस्तोमा भने मूत्र प्रणाली, आन्द्रा, पाठेघर, अण्डाशय र अन्य अंगहरूमा क्यान्सरको जोखिम बढाउन सक्छ ।

रोकथाम

पिसाबथैलीको क्यान्सर रोक्न कुनै ग्यारेन्टी तरिका छैन । केही प्रयासले केही रोकथाम भने हुनसक्छ ।

- धुम्रपान गर्नुहुन्न भने सुरु नगरेकै राम्रो हुन्छ । धुम्रपान गर्ने बानी भए त्याग्नुपर्छ ।
- कुनै पनि औषधि चलाउँदा सावधान रहने, रसायनहरूसँग काम गर्ने पेशा भए सुरक्षाका साधन अपनाउने ।
- विभिन्न रंगीन फलफूल र तरकारीहरूले भरिपूर्ण खानेकुरा नखाने, फलफूल र तरकारीमा पाइने एन्टिअक्सिडेन्टले क्यान्सरको जोखिम कम गर्न मद्दत गर्छ ।
- पिसाबथैलीमा पटक-पटक संक्रमण भए उपचारमा ढिलाइ नगर्ने । - अनलाइन

### माओवादी....

विधुत निर्यात मार्फत समृद्धिको यात्रा :

विगतमा प्रचण्ड नेतृत्वको सरकार हुन्दा दशकौं लामो कृत्रिम लोडसेडिङको अन्त गरेको थियो आर्थिक वर्ष २०८०-८१ सम्ममा अरवौंको बिधुत विदेश निर्यात शुरु गरिसकेको छ । स्मरण रहोस् पहिलोपटक अनेक विरोधका वावजुद प्रचण्ड प्रधानमन्त्री हुन्दा कुलमान घिसिङलाई बिधुत प्राधिकरणको प्रमुखमा नियुक्त गरिएको थियो । नेकपा( माओवादी केन्द्र)को सरकार हुन्दा कुलमानले ढुक्कसँग काम गर्न सकेको र सरकार परिवर्तनसङ्गै स्पष्टीकरण दिदै हिड्नुपर्ने कुलमानको दिनचरिया जस्तै बनेको छ । हालैको डेडिकेटेट ट्रंक लाईन विवाद पनि जनताले नजिकवाट नियालिरहेको छ ।

९) नेवा: र तामाङ भाषा सरकारी भाषाको रुपमा प्रचलनमा ल्याउने निर्णय:

आर्थिक वर्ष ८०/८१ मा बागमती प्रदेशवाट नेवा: भाषा र तामाङ भाषालाई सरकारी कामकाजी भाषाकोरुपमा मान्यता दिएको छ जसका कारण सो भाषाका जनताहरुले आफ्नै मातृ भाषा बात सरकारी कामकाज गर्न पाउने भएका छन् । भासिक आन्दोलनमा यो महत्वपूर्ण उपलब्धि हो । पहिचान पक्षधर पार्टी (नेकपा माओवादी केन्द्र)को नेतृत्व कस्तो हुने भन्ने यो कामले पुस्त्याएको छ ।

१०) राष्ट्र भाषाको मान्यता:

गणतन्त्रको स्थापना पछाडी जब नेकपा(माओवादी केन्द्र)का अध्यक्ष पुष्पकमल दाहालजप्रचण्डझको प्रधानमन्त्रीत्वकालमा मात्र भाषिक आन्दोलनलाई सम्मानस्वरुप सबै भाषालाई राष्ट्र भाषाको सम्मान दिई जनताको भावनाको कदर गरेको थियो ।

११) नेपाल सम्वत घोषणा तथा कार्यान्वयन :

नेपाल सम्वतलाई राष्ट्रिय सम्वत कायम २०६५ सालमा गरिएको थियो साथै त्यसको १५ वर्षपछी २०८० सालमा कामकाजी सम्वतकोरुपमा प्रचण्ड नेतृत्वमानै भएको थियो । जसले जनताप्रति उत्तरदायी सरकार तथा जन नेतृत्व कायम गरिएको पुष्ट्याएको थियो ।

१२) सरकारी कम्पनिहरु नाफामा:

कहिलेपनी नाफामा नगएको अनवरत घाटाको रेकर्ड वनाएको नेपाल वायुशेवा निगम,विधुत प्राधिकरण,नेपाल आयल निगम लगायतका संस्थाहरुलाई नाफामा लग्न सफल भएको छ । कुशल ब्यवस्थापन भए असम्भव केही नहुने प्रमाणीत भएको छ ।

१३) मितब्ययी सरकार :

ईतिहासकै मितब्ययी सरकारको छवि वनाउन सफल भएको नेपाल सरकारको रुपमा (माओवादी केन्द्र)का अध्यक्ष प्रचण्ड नेतृत्वको सरकार रहेको थियो यो समयमा देशको ऋण नगण्य मात्रामा मात्र वृद्धि भएको थियो ।

नेकपा(माओवादीकेन्द्र)नेतृत्वको सरकारलाई मितव्ययी,जनमुखी भन्न सकिने केही आधारहरू छन्:

क) भ्रष्टाचारविरुद्ध अभियान: सरकारको नेतृत्वले भ्रष्टाचारविरुद्ध अभियान चलाएको थियो, जसले सरकारी खर्चमा पारदर्शिता र मितव्ययितालाई प्रोत्साहन गर्‍यो ।

ख) सार्वजनिक खर्चमा कटौती: सरकारले विभिन्न अनावश्यक खर्चहरूमा कटौती गर्दै सार्वजनिक खर्चलाई नियन्त्रणमा राख्ने प्रयास गरेको थियो ।

ग) आर्थिक सुधारका कार्यक्रमहरू: सरकारको नेतृत्वले आर्थिक सुधारका विभिन्न कार्यक्रमहरू ल्याएको थियो, जसले सरकारी खर्चलाई व्यवस्थित र मितव्ययी बनाउन मद्दत पुर्‍यायो ।

यी आधारहरूका कारण, निवर्तमान नेकपा (माओवादीकेन्द्र)नेतृत्वकोसरकारलाई मितव्ययी,जनमुखी,प्रभावकारी भन्न सकिन्छ । त्यसैले देश र जनताका लागि (माओवादी केन्द्र)को नेतृत्व सबल, सक्षम, फाईदाजनक देखिएको छ । देशलाई अगाडी वढाउन माओवादी केन्द्र आवश्यक छ । अत: सवै जनताले सोचौं, नेकपा( माओवादी केन्द्र)लाई अत्याधिक वहुमत दिएर जिताऔं ।

(श्रिष्ठ- नेकपा (माओवादी केन्द्र) मध्यपुर थिमि नगरका अध्यक्ष तथा मध्यपुर थिमि नगरपालिकाका नगर उपप्रमुख हुन्)

# महानगर-एमाले द्वन्द्व : प्रधानमन्त्रीबाटै कानुनको अपहेलना !



काठमाडौं । सत्ता गठवन्धनमा रहेको र सरकारकै नेतृत्व गरेको नेकपा एमालेले जागरण सभाको नाम दिएर प्राय सत्ता बाहिर रहने गरेका र सत्तापक्षले विपक्षको आवाज नसुनेको अवस्थामा आम जनतालाई सडकमा उतारेर सत्तापक्षलाई दवाव दिनकै लागि विपक्षी राजनीतिक दलले उपयोग गर्ने सडकलाई सत्तामा रहेकै र अझ सत्ताको नेतृत्व गरेको राजनीतिक दलले प्रयोग गर्नुलाई राजनीतिक विश्लेषकहरु र आम नागरिकले पनि अनौठो मानेको अवस्थामा नेकपा एमालेले काठमाडौंको दरबारमार्गका सडकमा फोहोर गरेवापत काठमाडौं महानगरपालिकाले एकलाखको जरिवाना तिर्न पार्टी कार्यालयलाई सम्बोधन गर्दै पत्र काटेकोमा नेकपा एमालेले सो जरिवाना तिर्न अस्वीकार गरेको छ । सो पार्टीका अध्यक्ष केपी शर्मा ओली यतिबेला देशको प्रधानमन्त्री छन् । प्रायः पार्टीले गरेको सरकार विरोधी सभामा प्रधानमन्त्री उपस्थित भएर भाषण गर्दैनन् । तर, प्रधानमन्त्री ओलीले एमालेको जागरण सभामा गएर भाषण गरे । उनले आफू विरुद्ध लागेका पार्टी, समूह र व्यक्तिसम्मलाई गाली गर्न भ्याए ।

काठमाडौं महानगरभित्र फोहोर गर्नेलाई कारवाही गर्ने कानुनी अधिकार महानगरलाई छ । यही कानुन प्रयोग गरेर महानगरले यस अघि राष्ट्रिय प्रजातन्त्र पार्टीलाई जरिवाना तिराएको थियो । अहिले नेकपा एमालेले जागरण सभाका नाममा दरबारमार्गका सडक र आसपासको क्षेत्रमा फोहोर गर्यो भनेर एक लाख जरिवाना तोकेर महानगरले पत्र पठाएको हो । राप्रपालाई त्यही विषयमा जरिवाना गरेपछि एमालेलाई नगर्दा महानगरको कानुन उल्लंघन हुन्छ । मेयर बालेन शाहले ठूला र सानाबीच कानुनी भेदभाव गरेको ठहरिन्छ । यसैले महानगरले पठाएको जरिवाना पत्रलाई सबैले उचित भनेका छन् ।

कानुनका जानकारहरु भन्छन्, 'एमालेको जागरण सभासँग प्रधानमन्त्री ओलीसमेत जोडिएकाले काठमाडौं महानगरपालिकाले जरिवाना तिर्न भनेर पठाएको पत्र अस्वीकार गर्दा प्रधानमन्त्रीको दलले कानुन नमानेको र मिच्न खोजेको ठहरिन्छ । प्रधानमन्त्रीले कानुन मिचेको ठहरिन्छ ।' जरिवाना पत्र नबुझ्दा एमालेसहित प्रधानमन्त्री ओलीको जनस्तरमै निकै विरोध भइरहेको छ । जनस्तरको विरोध र कानुनको विषयलाई मान्यता नदिएर प्रधानमन्त्री ओली भने बालेनको पत्र नबुझ्न पार्टी कार्यालय रुँगेर बसेका नेताहरूलाई निर्देशन दिइरहेका छन् ।

यो विषयमा ओली नबोलेका भए आइतबार नै एमालेका नेताहरूले महानगरको पत्र बुझेर जरिवाना तिरिसक्थे र विरोध पनि आउने थिएन । तर, ओलीलाई महानगरको भन्दा पनि बालेनको पत्र भन्ने चिन्ता लागेको छ । एउटा महानगरको मेयरले देशको कार्यकारी प्रमुखलाई जरिवाना तिराउने भन्ने इगो जागेको छ । तर, ओलीको यो इगोले कानुन मिचेको छ । एमालेले जरिवाना पत्र भौतिक रूपमा बुझ्न अस्वीकार गरेपछि महानगरले फेरी हुलाक र इमेलमार्फत पठाएको छ । एमालेको जस्तै फोहोर गरेको आरोपमा महानगरपालिकाले राष्ट्रिय प्रजातन्त्र पार्टीलाई जरिवाना तिराएको थियो ।

गत चैत २७ गते राप्रपाले प्रदर्शन गर्ने क्रममा महानगरको विभिन्न क्षेत्र फोहोर गरेको र ट्राफिक आइल्यान्डमा क्षति पुर्याएको भन्दै महानगरले जरिवाना तिराएको थियो । काठमाडौं महानगरपालिकाले राप्रपालाई फोहरमैला ऐन २०६८ को दफा ३९ अनुसार ५ हजार जरिवाना र स्थानीय सरकार संचालन ऐन २०७४ को दफा ९७ अनुसार आन्दोलनका क्रममा ट्राफिक आइल्याण्ड मर्मतका लागि २ सय २२ रुपैयाँ ८१ पैसा लागेकाले सोही अनुरूप जरिवाना गरेको थियो । गत शुक्रबार दरबारमार्गको सभाका क्रममा फोहोर गरेको भन्दै एमालेलाई पनि जरिवाना लगाएको हो । एमालेलाई फोहोर गरेवापत १ लाख रुपैयाँ जरिवाना गर्ने निर्णय महानगरको छ ।

महानगरले एमालेलाई पनि मंसिर ७ गते काठमाडौँ महानगरपालिका-१ दरबारमार्गस्थित खुला सडकमा जागरण सभा गर्ने क्रममा सडक तथा सडक पेटीमा जथाभावी फोहरमैला गरी वातावरण प्रदूषण गरेकोले फोहरमैला व्यवस्थापन ऐन, २०६८ र काठमाडौँ महानगरपालिकाको आर्थिक ऐन २०८१ बमोजिम एक लाख रुपैयाँ जरिवाना गरेको जनाएको छ । खासमा दरवारमार्गमा नै सभा राख्न पनि प्रधानमन्त्री ओलीले नै दवाव दिएका थिए । यो विषयलाई लिएर अहिले एमालेको ओली मन नपराउने पक्षले पनि विरोध गरिरहेको छ । उनीहरू खुलेर बाहिर आउन भने सकेका छैनन् ।

प्रधानमन्त्री ओलीले दरवारमार्ग क्षेत्रमा महानगरले मोटरसाइकल पार्किङ गर्न नदिएको र त्यो खुलाउन पनि दवाव सिर्जना हुने भन्दै सोही क्षेत्रमा एमालेको जागरण सभा राख्न निर्देशन दिएका थिए । दरवारमार्ग क्षेत्रका व्यवसायीले महानगरका मेयर बालेन शाहले सो क्षेत्रको सडकपेटीमा मोटरसाइकल पार्किङ गर्न नदिएर दुःख दिएको भन्दै एमाले र प्रधानमन्त्रीसँग गुनासो गरेका थिए । त्यसैको दवावस्वरुप ओलीले सो क्षेत्रमा सभा राख्न लगाएको एमालेकै नेताहरु बताउँछन् । महानगरले भने जसरी पनि जरिवाना तिराएरै छाड्ने अडान लिएको छ । कतिपयले भने महानगरलाई जरिवाना नतिर्ने हो भने अदालत जान पनि एमालेलाई सुझाव दिएका छन् । महानगरले गैरकानुनी रुपमा जरिवाना लगाएको भन्ने लागेमा प्रधानमन्त्रीले यसका विरुद्ध एमालेलाई अदालत पठाएर रिट हाल्नुपर्ने नत्र जरिवाना तिर्नुपर्ने सुझाव दिएका छन् । जरिवाना नतिर्ने भन्दै पत्र समेत नबुझ्दा एमाले र प्रधानमन्त्री आलोचित मात्र भएका छैनन् , प्रधानमन्त्रीमाथि कानुनी प्रश्नसमेत उठेको छ ।

# भ्रष्टाचार रोक्न शिक्षा, स्वास्थ्य निःशुल्क गर्नुपर्छ : मन्त्री खड्गी




ललिता साह, भक्तपुर । बागमती प्रदेशका सामाजिक विकास मन्त्री हरीप्रभा खड्गीले भ्रष्टाचार न्यूनिकरणका लागि शिक्षा र स्वास्थ्य निःशुल्क हुनुपर्ने बताउनुभएको छ । भक्तपुरको दरवार स्क्वायरस्थित श्री पद्म माविको १०१ औं र पद्म कलेको १५ औं वार्षिकोत्सवको अवसरमा शनिवार आयोजित कार्यक्रममा मन्त्री खडगीले सामुदायिक विद्यालयमा नै गुणस्तरीय शिक्षा र स्वास्थ्य सेवा निःशुल्क प्रदान गर्न सके भ्रष्टाचार मुक्त देश निर्माण गर्न सक्ने बताउनुभएको हो ।

उहाँले सामुदायिक विद्यालय अब्बल बनाउँदैं थोरै कमाएर महँगो विद्यालय पढाउनु परेको बाध्यता अन्त्य गर्न बागमती प्रदेशले निःशुल्क रुपमा गुणस्तरीय शिक्षाको निति लिएको बताउनुभयो ।

विश्व अघि बढ्नुमा विज्ञान / प्रविधिको भूमिका रहेको छ । पछिल्लो समय युवाहरू पलायन हुँदै गर्दा देश वृद्धाश्रम तर्फ धकेलिराखेको निराशाको दृश्य छ । युवालाई आफ्नै देशमा राख्न विदेशको आइटी विज्ञान प्रविधि भित्र्याउनुपर्छ, उहाँले भन्नुभयो ।

उहाँले विद्यार्थीहरुको भविष्यका लागि बागमती प्रदेशले ल्याएको पढ्दै कमाउँदै सिक्दै कार्यक्रम प्रदेशको सबै विद्यालयहरूले लागू गर्नुपर्नेमा जोड दिनुभयो । बागमती प्रदेशले प्रादेशिक शिक्षालय संचालनको अवधारणामा काम गरिरहेको बताउँदैं उहाँले पद्म माविको भौतिक पूर्वाधार निर्माणको जिम्मेवारी प्रदेश सरकारको भएकोले त्यसमा लाग्ने बजेट दिने प्रतिबद्धता जनाउनुभयो ।

विद्यालय व्यवस्थापन समितिका अध्यक्ष बाबुराजा जोशीले सभापतित्वमा सम्पन्न समारोहमा प्राचार्य राम हाडाले विद्यालयको वार्षिक शैक्षिक, भौतिक र आर्थिक प्रगति प्रतिवेदन सार्वजनिक गर्नुभएको थियो ।

पद्म मावि २०७३ मा नमुना विद्यालय घोषणा भएको हो । पद्मको कथा उज्यालोको शताब्दी पार गरिरहँदा विद्यालयले नमुना अब्बल र असल अभ्यासहरुमा देशमै अग्रस्थान ओगटेको छ । विद्यालय ३१ रोपनी १४ आना बढी जग्गा क्षेत्रफलमा फैलिएको छ । बागमती प्रदेशबाट भौतिक संरचनाको लागि डिपिआर भएर भवन निर्माणको लागि १६ करोड विनियोजन भएपनि हाल बजेट कार्यन्वयन प्रकृया रोकिएकोले प्रदेश सरकारको तर्फबाट सो बजेट निकासाको प्रकृया अघि बढाइदिन प्राचार्य हाडाले मन्त्री खड्कीसँग आग्रह गरेका छन् । समारोहमा विद्यालयको आधार भूत तहदेखि स्नातक तहसम्मका उत्कृष्ट विद्यार्थीहरूलाई पुरस्कृत गरिएको थियो भने २० वर्षसम्म विद्यालयमा अनवरत सेवा गरेका शिक्षक तथा कर्मचारीलाई दीर्घसेवा सम्मान प्रदान गरिएको थियो ।

समारोहमा बागमती बागमती प्रदेशका प्रदेश सभा सदस्यहरू विभिन्न पेशागत संघ संगठनका प्रमुखहरू , विद्यालयका पूर्व प्रधानाध्यकहरु , छात्रवृति दाताहरू ,प्रमुख जिल्ला अधिकारी, प्रहरी प्रमुख, पत्रकार , समाजसेवी , राजनितिज्ञ , नागरिक समाज तथा अभिभावकहरुको उपस्थिति रहेको थियो ।

# रोनाल्डोको २ गोलसँ नासरको जित



एजेन्सी - क्रिस्टियानो रोनाल्डोले २ गोल गरेको एएफसी च्याम्पियन्स लिग इलाइटको खेलमा साउदी क्लब अल नासरले कतारी क्लब अल घराफालाई ३-१ ले पराजित गरेको छ।

अल घराफाको मैदानमा सोमवार भएको खेलमा अल नासरको लागि अर्को एन्जेलो गाब्रियलले गरे । घराफाका जोसेलुले गरेको गोल गरे ।

दोस्रो हाफको पहिलो मिनेटमा रोनाल्डोले गोल गर्दै टोलीलाई अघि बढाए। ५८औं मिनेटमा गाब्रियलले गोल गरे । ६४औं मिनेटमा रोनाल्डोले अर्को गोल थपे ।

घराफाका जोसेलुले ७५ औं मिनेटमा गोल फर्काए। घराफाले १० खेलाडीमा सिमित हुँदै खेलको अन्त्य गर्यो । सेडोयु सानोले ८४औं मिनेटमा रातो कार्डको सामना गर्दै मैदान छाडेका हुन् ।

समूह 'बी' मा अल नासरको ५ खेल मा १३ अंकका साथ दोस्रो स्थानमा छ । अल घराफा ४ अंकसहित आठौं स्थानमा छ । १२ टोली रहेको समूहमा अल अली साउदी १५ अंकसहित शीर्ष स्थानमा छ।

# अक्सनमा आरसिबीको लगानी न्यून




एजेन्सी - इन्डियन प्रिमियर लिग(आइपिएल) का लागि भएको मेगा अक्सनमा रोयल च्यालेन्जर्स बेंगलुरु (आरसिबी) सबैभन्दा धेरै रकम बचाउँने टोली बनेको छ।

अर्को वर्ष २०२५ मा हुने १८औं संस्करणको आइपिएलका लागि आइतवार र सोमवार साउदी अरबमा भएको मेगा अक्सनमा आर सिबीले खर्च गर्न तोकिएको सिमा भन्दा ७५ लाख भारतीय रुपैयाँ कम खर्चेको छ । अधिकतम २५ खेलाडी अनुबन्ध गर्न पाउँनेमा आरसिबीले २२ खेलाडी मात्र टोली भित्रायो ।

आइपिएल अक्सनमा सबै टोलीले १ सय २० करोड भारतीय रुपैयाँ खर्च गर्न पाउने नियम थियो । आरसिबीले अक्सन अघि खेलाडी रिटेनमा ३७ करोड खर्च गरिसकेको थियो । विराट कोहलीलाई २१, रजत पाटीदारलाई ११ तथा यश दयाललाई बेंगलुरुले ५ करोड भारतीय रुपैयाँमा रिटेन गरेको थियो ।

अक्सनमा अस्ट्रेलियन तीव्रगतिका बलर जोस हेजलवुडलाई आरसिबीले सर्वाधिक रकममा अनुबन्ध गरेको थियो । हेजलवुडमाथि टोलीले १२ करोड ५० लाख खर्चिएको थियो । आरसिबीले ८ विदेशी खेलाडीको कोटा भने पूरा गरेको छ । विदेशी खेलाडीमा हेजलवुड, फिल साल्ट, लियम लिभिगंस्टोन, टिम डेबिड, रोमारियो शेफर्ड, नुवान तुषारा, जोकब बेथवेल र लुगिं एन्गोडि रहेका छन् ।

चेन्नई सुपर किंग्स र कोलकाता नाइटराइडर्स अक्सनमा सबै भन्दा बढी खर्च गर्ने टोली रहे। दुवै टोलीले समान १ सय १९ करोड ९५ लाख भारतीय रुपैयाँ खर्च गरेका छन् ।

आइपिएल इतिहासमा नै सर्वाधिक महँगा बनेका ऋषभ पन्त २७ करोडमा लखनउमा अनुबन्ध भएका थिए । ऋषभमाथि २७ करोडको खर्चिएको लखनउले कुल १ सय १९ करोड ९० लाख खर्चिएको छ ।

आइपिएल इतिकासकै दोस्रा सर्वाधिक महँगा खेलाडीमा र श्रेयस अय्यर रहे । २६ करोड ७५ लाखमा श्रेयसलाई अनुबन्ध गरेको पञ्जाब किंग्सले कुल १ सय १९ करोड ६५ करोड खर्च गर्यो । गएको सिजनको उपविजेता सनराइजर्स हैदराबादले दुई दिन चलेको मेगा अक्सनमा १ सय १९ करोड ८० करोड लाख खर्चिएको थियो ।

आइपिएलको पहिलो संस्करणको च्याम्पियन राजस्थान रोयल्सले मेगा अक्सनमा १ सय १९ करोड ६५ लाख खर्चिएको छ ।

साउदी अरबमा दुई दिन भएको अक्सनमा आइपिएलमा सहभागी १० टोलीले कुल १ हजार २ सय करोड भारतीय रुपैयाँ खर्च गर्न पाउने थिए । टोलीले अक्सन अघि भएको खेलाडी रिटेनमा ५ सय ४३.२५ करोड खर्च गरिसकेका थिए ।

रिटेन र मेगा अक्सनमा गरेर १० टोलीले जम्मा १ हजार १ सय ९७ करोड ६५ लाख भारतीय रुपैयाँ खर्च गरेका छन् । आइपिएलको १८ औं संस्करण मार्च १४ बाट सुरु हुनेछ ।

# एनपीएलका खेलहरू युट्युब मार्फत हेर्न सकिने

काठमाडौं । नेपाल प्रिमियर लिग (एनपीएल) को पहिलो संस्करणका खेलहरूको युट्युब प्रशारण अधिकार एक्सन स्पोर्ट्सले हासिल गरेको छ ।

डिजिटल माध्यमबाट खेलहरूको प्रत्यक्ष प्रशारण गर्न एनपीएलको व्यवसायिक अधिकार व्यवस्थापन गरिरहेको ब्रान्ड लजिक र डिश मिडिया नेटवर्कबीच सम्झौता भएको हो ।

दर्शकहरूले एनपीएलका खेलहरू एक्सन स्पोर्ट्सको आधिकारिक युट्युब च्यानल मार्फत प्रत्यक्ष रूपमा हेर्न सक्नेछन् । प्रतियोगिताका खेलहरू टेलिभिजनमा भने स्टार स्पोर्ट्स नेटवर्कबाट प्रसारण हुनेछ ।

## कीर्तिपुर....

कीर्तिपुरमा छैनन् । उम्मेदवारी दिने अन्तिम तयारीबाट रास्वपा ब्याक भएको थियो । बालेनको टीमले उम्मेदवार नउठाउने र कसैलाई पनि समर्थन नगर्ने जनाएको छ ।

तर, सफाइ अभियानकर्मी राजमान महर्जनसहितले दलीय उम्मेदवारलाई चुनौती दिने तयारी गरेका छन् । राजमानले अन्य स्वतन्त्र उम्मेदवारसँग मिलेर परम्परागत दललाई चुनौती दिने तयारी गरेका छन् । उनलाई धरान उपमहानगरपालिकाका मेयर हर्क साम्पाङको घोषित समर्थन छ । कीर्तिपुरमा कांग्रेसले आफ्नो पुरानो पकड जोगाउन खोज्दा प्रतिस्पर्धी दल एमाले र माओवादीले चुनौती दिने बताएका छन् ।

कीर्तिपुरका २० उम्मेदवार दलगत उम्मेदवार एमाले - डा. सुरेन्द्र मानन्धर, कांग्रेस - कृष्णमान डंगोल, माओवादी - प्रा.डा. शिवशरण महर्जन, जसपा नेपाल तेस्रोलिंगी (यौनिक अल्पसंख्यक) दीपक महर्जन (हनी), राप्रपा - ध्रुव महर्जन, जनमत - केशव श्रेष्ठ, नेपाल समाजवादी पार्टी - दिलकुमार महर्जन, नेकपा एस - भानु रिजाल र नेमकिपाबाट - श्रीकृष्ण महर्जन रहेका छन् ।

स्वतन्त्रमा राजमान महर्जन, दिनेशकुमार अधिकारी, नवरथकुमार बानियाँ, आनन्द महर्जन, कविकुमार महर्जन, रामकृष्ण महर्जन, नरेशराज पाण्डे, नरेश श्रेष्ठ, मीम महर्जन, प्रेमबहादुर महर्जन र धर्मरत्न मानन्धर रहेका छन् ।

त्यस्तै दैलेखेको महाबु गाउँपालिकामा २०७९ को स्थानीय तहको निर्वाचनमा कांग्रेसका लछुमन गुरुङ अध्यक्षमा निर्वाचित भएका थिए । गुरुङले २९७९ मत ल्याउँदा एमालेका हरिप्रसाद उपाध्यायले २५११ मत प्राप्त गरेका थिए । कांग्रेसका गुरुङ ४६८ मतान्तरले विजयी भएका थिए । त्रिपक्षीय प्रतिस्पर्धामा नेकपा एकीकृत समाजवादीका जंगबहादुर शाहीले २२६८ मत प्राप्त गरेका थिए । महाबुमा यसपटक पनि प्रमुख दलबीच नै प्रतिस्पर्धा हुने देखिएको छ । महाबुमा यसपटक दलीय उम्मेदवारी मात्रै परेको छ । उपनिर्वाचनका लागि ७ जना उम्मेदवार चुनावी मैदानमा छन् । अघिल्लो पटक जस्तै यसपटक पनि प्रमुख दलहरू तालमेल नगरी प्रतिस्पर्धामा उत्रिन लागेका हुन् ।

कांग्रेसले झलकबहादुर भण्डारीलाई उम्मेदवार बनाउँदा एमालेले नेकपा एकीकृत समाजवादी छाडेका शाहीलाई उम्मेदवार बनाएको हो । शाही अघिल्लोपटक नेकपा एकीकृत समाजवादीबाट उम्मेदवार बनेका थिए । उनले कांग्रेस र एमाले उम्मेदवारलाई चुनौती थिए । यसैले पार्टीमा भित्र्याएर एमालेले शाहीलाई उम्मेदवार बनाएको हो । शाही २०७४ सालमा पनि महाबुको अध्यक्षमा निर्वाचित भएका थिए । अन्य दलका उम्मेदवारमा माओवादी केन्द्रबाट जंगबहादुर बराल मगर, राष्ट्रिय स्वतन्त्र पार्टी - प्रकाशबहादुर बुढा, नेकपा एकीकृत समाजवादी - जगतबहादुर हमाल, राप्रपा - सुर्जे रावत र नेमकिपा - दुर्गबहादुर मगर छन् ।

२०७९ वैशाखमा भएको स्थानीय तहको निर्वाचनमा मोरङको ग्रामथान गाउँपालिकाको अध्यक्षमा कांग्रेसबाट जयप्रकाश गच्छदार विजयी भएका थिए । गच्छदारले ७६०५ मत ल्याएका थिए । एमालेका शिवनारायण माझीले ६०९३, माओवादीका विजयकुमार सरदारले २७२७ र राप्रपाका पखुला विश्वासले ४४६ मत पाएका थिए । अध्यक्षमा जितेका गच्छदारको निधन भएपछि ग्रामथानमा उपनिर्वाचन हुन लागेको हो । यसपटक ग्रामथानको अध्यक्षका लागि १६ जनाले उम्मेदवारी दिएकोमा सबैको उम्मेदवारी कायम छ, जसमा १५ दलीय र एक स्वतन्त्र उम्मेदवार छन् । अघिल्लोपटक जस्तै यसपटक पनि ग्रामथानमा प्रमुख पार्टीका उम्मेदवारबीच नै प्रतिस्पर्धा हुँदैछ । कुनै पनि दलले चुनावी तालमेल गरेका छैनन् ।

अध्यक्षमा कांग्रेसबाट बलराम सरदार उठ्दा एमालेले तुलसीराम विश्वासलाई उम्मेदवार बनाएको छ । विश्वास २०७९ को निर्वाचनअगाडि मात्रै कांग्रेसबाट एमालेमा प्रवेश गरेका थिए । माओवादीले नमोनारायण माझीलाई उम्मेदवार बनाएको छ । माझी पनि तीन महिनाअघि मात्रै कांग्रेस छोडेर माओवादीमा पुगेका हुन् । यसैले प्रमुख तीन पार्टीकै उम्मेदवारको पृष्ठभूमि एउटै छ ।

अध्यक्षमा राष्ट्रिय स्वतन्त्र पार्टीबाट नवीनकुमार खवासको उम्मेदवारी परेको छ । प्रमुख तीन पार्टीकै उम्मेदवारको पृष्ठभूमि कांग्रेस भएकाले पनि ग्रामथानको प्रतिस्पर्धा रोचक हुने देखिएको छ । नेपाल मजदुर किसान पार्टीले पर्शुराम विश्वास थारुलाई उम्मेदवार बनाएको छ ।

## मध्यपुर....

दक्षिण कोरिया सरकारको ९.५ मिलियन युएस डलर (करिव १ अर्व २८ करोड बरावरको सहयोगमा निर्माण हुन गईरहेको दोश्रो चरणको सुविधा सम्पन्न भवनले नगरवासीहरुका साथै आसपासका जिल्लाबासीलाई समेत अझ गुणस्तरीय र प्रभावकारी स्वास्थ्य सेवा प्रवाह गर्न सहज हुने अपेक्षा आफूले लिएको बताए ।

मध्यपुर थिमि नगरपालिकाका उपप्रमुख विजयकृष्ण श्रेष्ठले कोरिया सरकारको निरन्तर सहयोग र स्थानीय सरकारको आर्थिक तथा प्राविधिक सहयोग, जनप्रतिनिधिहरुको लगाव, स्वास्थ्य सेवामा अभिरुची, निर्देशन, अनुगमनको कारण यो अस्पताल देशकै अब्बल स्वास्थ्य सेवा प्रदायक संस्थामध्ये एक बन्न सफल भएको बताउँदै आगामी दिनहरुमा पनि गुणस्तरीय सेवाका लागि स्थानिय सरकार निरन्तर लागिरहने प्रतिवद्धता व्यक्त गरे । कार्यक्रममा स्वागत मन्तव्य अस्पतालका कार्यकारी निर्देशक डा. डि के रौशनले गरेको थियो । कार्यक्रममा सहजीकरण नगरपालिका आर्थिक विकास महाशाखा प्रमुख तुलसीभक्त तकोले गरेको कार्यक्रममा जनप्रतिनिधिहरु स्थानीय तहका दलका नेताहरु र स्थानीय बासिन्दाको उल्लेखनीय सहभागिता रहेको थियो ।

सो अवसरमा बागमती प्रदेश सरकारका पूर्व मन्त्री डा राजेन्द्रमान श्रेष्ठ, प्रदेश सभा सदस्यहरु धनेश्वरी प्रजापति, भुवनकेशरी श्रेष्ठ र सुरेश श्रेष्ठ त्यसैगरी जिल्ला समन्वय समिति भक्तपुरकी उपप्रमुख सुजाता वादे श्रेष्ठ, चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्री, प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्याल, कोइका कन्ट्री डाइरेक्टर मोहेन कोङ र कान्जो सामसुङ अस्पताल कोरियाका प्रमुख डा काङ जेउ

## नेवार.....

समेत विवादका कुराहरु आउने गरेका छन् । तिथिको विवादलाई समाधान गर्नुपर्छ भन्ने सवालमा नेवारहरूको भावना रहेको अवस्थामा नेवार हरूको साझा राष्ट्रिय संगठन नेवाः देय् दबू स्वनिगः(उपत्यका) विशेष प्रदेश समितिले विवाद समाधानका लागि अभियाना शुरू गरेको छ ।

यसैवीच नेपाल ज्योतिष परिषद उपत्यका समितिको नयाँ नेतृत्वलाई नेवाः परम्पार अनुसार विशेष सम्मान 'खेँ सगं' (अण्डा सगुन) दिई तिथि विवाद समाधानका लागि अभियानको शुरुबाट गरेको छ । नेवाः देय् दबू स्वनिगः विशेष प्रदेशको संयोजनमा र नेवाः देय् दबू मध्यपुर थिमि नगर समितिको आयोजनामा गत मंसीर ७ गते शुक्रवार मध्यपुर थिमिको लायकू (दर्बार) क्षेत्रमा तिथि विवादको बारेमा कार्यक्रमको शुभारम्भ गरेको छ ।

कार्यक्रममा नेवाः देय् दबू स्वनिगः विशेष प्रदेश समितिका अध्यक्ष एवं पत्रकार श्रीकृष्ण महर्जनले तिथि विवाद समाधानका लागि नेवार ज्योतिषहरूको सम्मेलन गर्नुपर्ने, काठमाण्डौको जनबहाल, ललितपुरको क्वाःबहाल, भक्तपुरको तलेजु लगायका काठमाण्डौ उपत्यकाका विभिन्न धार्मिक स्थाल र नेवार समुदायमा पुरोहीतको काम गर्ने बज्राचार्य, जोशी, कर्माचार्य, राजोपाध्यायका प्रतिनिधिहरू सहितको छलफल गरि करिव एक बर्ष भित्रमा समस्या समाधान गर्ने योजना बनाई अघि बढ्नुपर्ने बताउनु भयो। पाल ज्योतिष परिषद उपत्यका समितिका अध्यक्ष ज्योतिष यज्ञरत्न बज्राचार्यले नेवार समुदाय भित्रको तिथि विवाद समाधानका लागि सबै एकजुट हुनुपर्ने बताउदै ज्योतिषहरूको तर्फवाट पनि आवशयका भूमिका निर्वाह गर्न आफूहरु तयार रहेको बताउनु भएको थियो ।

नेवाः देय् दबू स्वनिगः विशेष प्रदेश समितिका सचिव हरिबहादुर श्रेष्ठले संचालन गर्नु भएको र नेवार देय् दबू मध्यपुर थिमि नगर समितिका निर्वमान अध्यक्ष बाबुकाजि साछेँ श्रेष्ठले स्वागत मन्तब्य ब्यक्त गर्नु भएको उक्त कार्यक्रम नेवाः देय् दबू मध्यपुर थिमि नगर समितिका अध्यक्ष ज्ञानदेव श्रेष्ठको अध्यक्षतामा मध्यपुर थिमि नगरपालिका वडा नं। ४ का वडा अध्यक्ष बालकृष्ण श्रेष्ठको प्रमुख आतिथ्यमा उक्त कार्यक्रम भएको हो । कार्यक्रममा नेवाः देय् दबू काठमाण्डौ, ललितपुर र भक्तपुर जिल्ला समितिका साथै विभिन्न नेवार संगठनका प्रतिनिधिहरू सहभागी भएका थिए ।

## निर्माण

सुरु हुने उनले बताए । किनकि कम दरमा गुणस्तरीय काम हुन नसक्ने अनि गुणस्तरीय काम हुन नसकेपछि भुक्तानी पाउनका लागि कर्मचारीतन्त्रसँगै मिलेमतो गर्नुपर्ने आवश्यकता सुरु हुने बताए ।

निर्माण व्यवसायीहरुले काम गर्नका लागि नभई अरुलाई काम पार्न नदिनका लागि त्यसो गर्ने गरेको उनको भनाई थियो । अरुलाई भड्काए पछि अरु विषयमा फाइदा हुने गरे पनि निर्माण व्यवसायको क्षेत्रमा घाटा हुने उनले बताए । कममा टेण्डर भरेपछि आफूलाई काम आउने र त्यो काम गर्न नसक्ने भएर आफैंलाई घाटो हुने उनको भनाई थियो ।

फरक प्रसंगमा उनले राजनीतिक पार्टी र नेतालाई मात्रै गाली गरेर देश नवन्ने बताए । देश बनाउनका लागि सवै मिलेर समस्याको समाधानको बाटोतिर लाग्नुपर्ने खाँचो उनले औंल्याए ।

नेपाल निर्माण उद्योग परिषद्को कार्यालयको सोमबार राजधानीमा भएको समुदघाटन कार्यक्रममा उनले समाधानको बाटोतिर नलागी एकले अर्कोलाई गाली गरेर मात्रै केही नहुने बताए ।

लोकतन्त्रको खम्वा भनेको राजनीतिक दल हुने र राजनीतिक दललाई बलियो बनाउन सके मात्रै लोकतन्त्र बलियो हुने धारणा उनले पोखे । उनले राजनीतिक दल बलियो भए राज्य बलियो हुने र राज्य बलियो भए मात्रै जनता सक्षम हुने बताए ।

देशको नेतृत्व गर्न अहिले एमाले र कांग्रेस मात्रैले गर्न सक्ने भन्दै उनले अन्य पार्टीहरु आवश्यक नभएको बताए । अहिलेलाई देश कि त एमालेले कि त कांग्रेसले मात्रै अगाडि वढाउन सक्छ, उनले भने, अरुले पनि नेतृत्व गर्ने हो भने त्यही अनुसारको तयारी गरेर अगाडि वढ्नुपर्छ । यही कारण अहिले कांग्रेस र एमाले मिलेर सरकार बनाएको उनको भनाई थियो ।

हरेक समस्याको समाधान समस्यासँगसँगै आएका हुन्छ, उनले भने, त्यसकारण समस्याको समाधानतिर पनि लाग्नुपर्छ, समस्याको मात्रै कुरा गरेर केही हुँदैन । उनले नेपालमा रोजगारी छैन, नेपालमा बसेर केही पनि हुँदैन भनेर भाष्य निर्माण गरिरहेको बताए । नेपालमै पनि धेरै अवसरहरु रहेको उनले उदाहरणसहित व्याख्या गरे ।

एकजना नेपालीले खाडी गएर जति कमाउँछ, त्यो भन्दा दोव्वर बढी भारतबाट नेपाल आएका एकजना साइकल व्याईले कमाउँछ, उनको उदाहरण थियो । काठमाडौंसहित धेरै सहरहरुमै भारतीय नागरिकहरुले धाक्न थालेको भन्दै उनले नेपालमै अवसरहरु हुँदाहुँदै नेपालीहरु विदेशिने गरेको बताए ।

कार्यक्रममा नेकपा एमाले जनसंगठन विभाग समन्वय संयन्त्रका प्रमुख भानुभक्त ढकाल, एमाले केन्द्रिय सदस्य कृष्णबहादुर केसी, नेपाल निर्माण उद्योग परिषद्का अध्यक्ष बलीभद्र राणा, महासचिव रामशरण देउजालगायतले निर्माण व्यवसायका विविध क्षेत्रबारे चर्चा गरेका थिए ।

## प्राकृतिक.

जोगिन सकेनन् । उक्त परिवारका तीन सदस्य मात्र अब जीवित छन् ।

गत साउन ३२ गते सोलुखुम्बुको खुम्बु पासाङल्हामु गाउँपालिका-५ स्थित थामे खोलाको बाढीले थामे गाउँका १५ घर पूर्ण रूपमा क्षति पुऱ्याएको थियो । थामे गाउँदेखि केही माथी रहेको हिम पोखरी विष्फोट हुँदा उक्त बाढी आएको थियो । बाढीबाट क्षति भएका सबै घरपरिवार शेर्पा समुदायका थिए । स्थानीय, प्रदेश र सङ्घीय सरकारले तत्काल केही राहत रकम उपलब्ध गराए पनि अझै विस्थापित परिवारहरू पुनःस्थापित हुन सकेका छैनन् । दिउँसै बाढी आएको कारण मानवीय क्षति नभए पनि करोडौं मूल्य बराबरको भौतिक क्षति हुनाका साथै गाउँको भौगोलिक स्वरूप नै परिवर्तन भएको छ ।

प्रस्तुत तीन उदाहरणले पनि प्रष्ट हुन्छ कि यसवर्षको प्राकृतिक प्रकोपमा कसरी आदिवासी जनजाति समुदायले भौतिक तथा मानवीय क्षति व्यहोरे । प्राकृतिक प्रकोपमा यी समुदाय सधैं उच्च जोखिममा छन् । यसवर्षको मनसुनबाट ज्यान गुमाउनेको तथ्याङ्क विश्लेषण गर्ने हो भने पनि उक्त तथ्य पुष्टि हुन्छ ।

विपद्मा ज्यान गुमाउने ४१.५४ प्रतिशत आदिवासी जनजाति

यसवर्षको मनसुन (वैशाखदेखि असोज सम्म) मा बाढीपहिरो लगायतका प्राकृतिक प्रकोपबाट मृत्यु भएका चार सय ४३ मध्ये आदिवासी जनजातिको सङ्ख्या एक सय ८४ जना छन् । उक्त तथ्याङ्कअनुसार कुल मृतकको ४१ दशमलव ५४ प्रतिशत आदिवासी जनजातिले ज्यान गुमाएका हुन् ।

मृतकमध्ये चार जनाको पहिचान हुन बाँकी छ । बेपत्ताको सङ्ख्या ६६ जना रहेको राष्ट्रिय आपतकालीन कार्यसञ्चालन केन्द्रले जनाएको छ । तर बेपत्ताको नामथरसहितको विवरण केन्द्रसँग उपलब्ध छैन । बेपत्ताको समेत विवरण यकिन हुने हो भने ज्यान गुमाउने आदिवासीको सङ्ख्या अझै धेरै हुनसक्ने अनुमान गर्न सकिन्छ ।

कुल मृतक तथा बेपत्ताको सङ्ख्या जोड्ने हो भने जम्मा पाँच सय नौ जनाले यसवर्षको मनसुनमा ज्यान गुमाएका छन् । मनसुनी विपद्मा परी दुई सय २८ महिला तथा बालबालिकाको मृत्यु भएको छ । कुल मृतक सङ्ख्यालाई आधार मान्ने हो भने ५१ दशमलव ४७ प्रतिशत महिला तथा बालबालिकाको मृत्यु भएको छ । जसमध्ये ६० जना बालबालिका छन् । कुल मृतकमध्ये १३ दशमलव ५५ प्रतिशत बालबालिकाले ज्यान गुमाएका छन् । ज्यान गुमाएका बालबालिकामध्ये ३५ बालक र २५ बालिका छन् ।

प्रदेशगत विवरणअनुसार यसवर्षको मनसुनमा सबैभन्दा बढी बागमती प्रदेशमा दुई सय ६७ जनाले ज्यान गुमाए । कोशीमा ४३, गण्डकी ५५, लुम्बिनी २९, कर्णाली १६, सुदुरपश्चिम १६ र मधेश प्रदेशमा १३ जनाले ज्यान गुमाएका छन् ।

जलवायु विज्ञहरूका अनुसार गत असोज ११ गतेदेखि १७ गतेभित्रको मनसुनी विपद जलवायु परिवर्तनको असर प्रमुख कारण मानिएको छ । असोजमा मात्रै तीन सय तीन जनाको ज्यान गयो । यसवर्षको मनसुनमा ज्यान गुमाउने कुल सङ्ख्यालाई आधार मान्ने हो भने असोजको बेमौसमी बर्सातका कारण गएको बाढीपहिरोबाट ६८ दशमलव ३९ प्रतिशतले ज्यान गुमाए ।

उक्त अवधिमा काभ्रेपलाञ्चोक जिल्लाले सबैभन्दा ठूलो क्षति व्यहोर्नुपऱ्यो । बाढीपहिरोबाट काभ्रेमा मात्रै ७९ को मृत्यु, ७८ घाइते र छ जना बेपत्ता भए । जिल्ला प्रशासन कार्यालय काभ्रेपलाञ्चोकले उपलब्ध गराएको उक्त तथ्याङ्क अझ विस्तृत रूपमा तयार हुन बाँकी रहेको सहायक प्रमुख जिल्ला अधिकारी सुवास पौडेलले बताउनुभयो ।

सो अवधिमा काभ्रेमा मृत्यु भएका ७९ मध्ये ३८ जना आदिवासी जनजाति समुदायका छन् । उक्त सङ्ख्या काभ्रेमा मृत्यु भएका कुल सङ्ख्याको ४८ दशमलव ११ प्रतिशत हो । जसमा तीनजना माझी, दुई मगर, एक श्रेष्ठ र बाँकी ३२ जना तामाङ समुदायका छन् ।

विसं २०७८ को जनगणनाअनुसार हिमाली, पहाडी र मधेसका जनजातिको सङ्ख्या एक करोड दुई लाख १८ हजार पाँच सय ७० रहेको छ । उक्त जनसङ्ख्या कूल जनसङ्ख्याको ३५ दशमलव ०४ प्रतिशत हुन आउँछ । यही तथ्यलाई आधार मान्ने हो भने पनि यस वर्षको मनसुनजन्य प्राकृतिक प्रकोपमा आदिवासी जनजातिले धेरै ज्यान गुमाउनुको साथै भौतिक क्षति व्यहोरेका छन् । जनसङ्ख्याको अनुपातमा आदिवासी समुदायले अधिकांश प्राकृतिक प्रकोपमा बढी क्षति भोग्दै आएको देखिन्छ ।

उपेक्षामा आदिवासी समुदाय

जुनसुकै प्राकृतिक प्रकोपमा आदिवासी जनजाति समुदायले बढी ज्यान गुमाउनु परेको र राज्यले सधैँ यस समुदायलाई उपेक्षा गर्ने गरेको आदिवासी अधिकारकर्मीहरू ठम्याइ छ ।

नेपाल आदिवासी जनजाति महासङ्घका महासचिव दिवस राईले समग्र विपद्लाई आधार मान्ने हो भने जहिल्यै ८० प्रतिशत क्षति आदिवासी जनजाति समुदायमा हुने गरेको दाबी गर्नुभयो । "आदिवासी जनजाति समुदाय किन धेरै पीडित हुन्छन् भने यो समुदायको निकटता बढी प्रकृतिसँग हुन्छ । त्यही भएर उनीहरू हिमाल मुनी, खोला किनारमा, ताल तलैया वनक्षेत्र नजिक बस्छन्", उहाँले भन्नुभयो, "यो समुदाय प्राकृतिक स्रोत साधनसँग जोडिएर काम गर्न सकिने ठाउँमा हुन्छन् । त्यसैले बढी क्षति उनीहरूले व्यहोर्नुपर्छ ।" आदिवासी समुदायको परम्परागत ज्ञान, प्रथाहरू प्रकृतिसँग सम्बन्ध राख्ने हुँदा प्राकृतिक प्रकोप वा जलवायु परिवर्तनको मूल असर आदिवासी समुदायलाई पर्ने गरेको उहाँले बताउनुभयो । आदिवासी समुदाय अहिले पनि विज्ञान प्रविधिभन्दा बढी रैथाने ज्ञान परम्परामा रूचाउन चाहने उहाँको भनाइ छ ।

राज्यले पक्ष राष्ट्रका रूपमा हस्ताक्षर गरेका अधिकांश अन्तर ाष्ट्रिय महासन्धिहरूमा आदिवासी जनजातिलाई प्राथमिकतामा राख्ने प्रतिबद्धता गरेपनि व्यवहारमा उपेक्षा गर्ने गरेको आदिवासी अधिकारकर्मी बताउँछन् । हालै अजरबैजानको बाकुमा सम्पन्न जलवायु परिवर्तनसम्बन्धी संयुक्त राष्ट्रसङ्घीय महासन्धीका पक्ष राष्ट्रहरूको सम्मेलन, कोप-२९ मा पनि विश्वभरका आदिवासी समुदायले सम्मेलन अवधिभर नारा जुलुस गरेको नेपाल आदिवासी जनजाति महासङ्घका केन्द्रीय अध्यक्ष गेल्जे शेर्पाले बताउनुभयो ।

"आदिवासी जनजाति समुदायलाई राज्यले उपेक्षा गर्ने चलन संसारभर नै देखिन्छ । सबैभन्दा बढी क्षति आदिवासीले भोग्ने तर त्यसबापत्को क्षतिपूर्ति वितरणमा सो समुदायको अधिकार नहुने ठूलो विभेद छ", अध्यक्ष शेर्पाले भन्नुभयो, "त्यसैका विरूद्ध हामी निरन्तर अधिकारको लडाइँमा छौँ ।"

कार्बन सञ्चितीकरण अर्थात् वन विनाश तथा क्षयीकरण घटाए बापत् हाल राज्यले प्राप्त गर्दै आएको कुनै पनि बजेट आदिवासी समुदायलाई केन्द्रित गरेर विनियोजन नगरिएको उहाँले बताउनुभयो । जलवायु नीति २०७६ कार्यान्वयनमा पनि अझै चुनौति देखिएको अधिकारकर्मी बताउँछन् ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# पहिलो हिट फिल्म भए पनि काम पाइनः अल्लु अर्जुन

एजेन्सी । अल्लु अर्जुन र रश्मिका मन्डन्नाको फिल्म ‘पुष्पा-२’ छिट्टै रिलिज हुँदैछ । यसैबीच चेन्नईमा फिल्मको प्रि-रिलिज कार्यक्रम आयोजना गरिएको थियो, जसमा अल्लु अर्जुनले आफ्नो फिल्मी करियरको सुरुवाती दिनहरूको बारेमा बताएका थिए ।

पहिलो फिल्म हिट भए पनि एक वर्षसम्म कुनै पनि फिल्ममा कास्ट नगरेको अभिनेताले बताए । अल्लु अर्जुनले भने, ‘मैले फिल्म गंगोत्रीबाट मुख्य कलाकारको रुपमा डेब्यु गरेको हुँ । यो फिल्म हिट साबित भयो तर कलाकारको हैसियतले खास केही गर्न सकिनँ ।’ ‘यति मात्र होइन, अर्को एक वर्षसम्म मैले कुनै काम पाइनँ । मसँग काम गर्न कोही तयार भएनन् । त्यसपछि नयाँ निर्देशकले मलाई आर्य फिल्म अफर गरे, त्यस पछि मेरो जीवन फेरियो र मैले पछाडि फर्केर हेर्नुपरेन ।’

अल्लु अर्जुनले निर्देशक सुकुमारसँगको आफ्नो सम्बन्धको बारेमा बताउँदै भने, ‘यदि मैले आफ्नो करियरलाई हेर्छु र मेरो जीवनमा सबैभन्दा बढी प्रभाव पार्ने एक व्यक्तिको बारेमा सोचें भने त्यो सुकुमार हुनेछ ।’

उनी अहिले पनि पोस्ट प्रोडक्सनमा व्यस्त छन् । म तिमीलाई धेरै मिस गर्दैछु, सुक्कु । हामी सबै मिलेर यो बाटोमा छौं । कार्यक्रमको क्रममा निर्माताहरूले पुष्पा- २ बाट विशेष नृत्य नम्बर किसिक लन्च गरेका थिए, जसमा श्री लीला पहिलो पटक अल्लु अर्जुनसँग देखिएका थिए ।

२०21 मा रिलिज भएको ‘पुष्पाः द राइज’ वर्षको सबैभन्दा धेरै कमाउने फिल्म बन्यो । सबै संस्करणहरू सहित यो फिल्मले लाइफ टाइम इन्डियामा ३१३ करोड र विश्वव्यापी रूपमा ४५० करोडको व्यापार गर्‍यो । सबैभन्दा धेरै कमाउने तेलुगु फिल्मको सूचीमा यो छैठौं नम्बरमा छ । फिल्म पुष्पा-२ डिसेम्बर ५ मा रिलिज हुँदैछ ।

# सौरभ चौधरीको “कर्मा”मा उपासना र मुकुन

काठमाडौं । नेपालको पहिलो समावेशी म्युजिक अवार्डअन्तर्गत ‘राष्ट्रिय समावेशी म्युजिक (निम) अवार्ड २०२५’ को आवेदन खुल्ला गरिएको कार्यक्रम संयोजक कमला जोशीले जानकारी दिइन् । विगत ७ वर्षदेखि निरन्तर आयोजना हुँदै आएको निम अवार्डमा पहिलो वर्षदेखि नै नेपालमा बोलिने विभिन्न भाषाभाषीका गीत संगीतलाई विशेष प्राथमिकताका साथ समेटिँदै आएको उनको भनाई थियो । अहिलेसम्मकै बृहत् संख्याका भाषाभाषीका गीतहरूको उत्साहपूर्वक सहभागिता हुँदै आएकाले पनि यसलाई नेपालकै पहिलो समावेशी अवार्डका रूपमा लिने गरिन्छ ।

नेपालभित्र बोलिने विभिन्न भाषा र भाकाका गीतहरूलाई कार्यक्रममा सहभागी गर्दै आइरहेको यो अवार्डमा काँठे भाका, देउडा भाका, नेपाल भाषा, तामाङ भाषा, मैथली, भोजपुरी, राई, लिम्बू, चौधरी, शेर्पा, मगर, गुरुङ, सतार, सुनुवारलगायतका विभिन्न भाषाका गीत र भिडियोहरू अवार्डमा सहभागी हुँदै आएका छन् भने यस वर्ष पनि ती भाषा तथा भाकाका गीत संगीतहरूलाई अवार्ड कार्यक्रममा समेटिने जोशीको भनाइ छ ।

२०२४ जनवरी १ देखि २०२४ डिसेम्बर ३० सम्म (१ वर्षभित्रमा) बजारमा आएका गीत तथा भिडियोहरूलाई समावेश गरिने अवार्ड आयोजकले बताएका छन् । एरा प्रोडक्सन प्रालिको व्यवस्थापनमा सम्पन्न हुने निम अवार्डका फारमहरू आयोजक संस्थाको कार्यालयवाट उपलब्ध हुनुका साथै ग्लोबल अनलाइन पेको अनलाइनमार्फत् पनि भर्न सकिने जनाइएको छ । गीतहरू दर्ता गर्नका लागि आवेदनको अन्तिम मिति पुस २० गतेसम्मका लागि तोकिएको संयोजक जोशीले बताइन् ।

# कन्ताराः च्याप्टर-१ को सुटिङ बस दुर्घटना हुँदा २० घाइते

एजेन्सी । ऋषभ शेट्टीको फिल्म कन्ताराः च्याप्टर १ को सुटिङ सेटबाट ठूलो खबर बाहिर आएको छ । चालक दलका सदस्यले भरिएको बस सुटिङ स्थल नजिकै दुर्घटनामा परेको खबर छ । दुर्घटनामा चालक दलका २० सदस्य घाइते भएका छन् ।

दुर्घटनापछि सुटिङ रोकिने खबर पनि आएको छ तर अहिले निर्माताले आधिकारिक विज्ञप्ति जारी गर्दै यसलाई सानो दुर्घटना भनेका छन् । दुर्घटनाको समयमा आइपुगेका एक प्रहरी अधिकारीले पीटीआईलाई दिएको जानकारी अनुसार चालक दलका सदस्यहरूले भरिएको बस मदुर, जडकलमा सुटिङ पूरा गरेर कोल्लुर फर्किरहेको थियो ।

दुर्घटना हुँदा बसमा २० जुनियर कलाकार रहेको र घाइतेहरुलाई जडकल र कुन्दरपुरका अस्पतालमा भर्ना गरिएको छ । जसमा चालक दलका ६ सदस्य गम्भीर घाइते भएका छन्, जसलाई जडकल महालक्ष्मी अस्पतालमा भर्ना गरिएको छ ।

एकातिर कन्ताराः च्याप्टर १ को छायांकन रोकिएको खबर छ । अर्कोतर्फ, फिल्मसँग सम्बन्धित व्यक्तिहरूले आधिकारिक विज्ञप्ति जारी गर्दै यसलाई सानो दुर्घटना भनेका छन् । विज्ञप्तिमा लेखिएको छ, हेडलाइनमा रहेका समाचार गलत हो ।

कन्ताराः च्याप्टर १ को टोलीले बिहान ६ बजेदेखि छायांकन सुरु गरेको जनाएको छ भने सबै सामान्य रुपमा चलिरहेको छ । छायांकन स्थलबाट २० किलोमिटर टाढा एउटा सानो दुर्घटना भएको थियो, जसमा कान्तारा टोलीका केही सदस्यहरू स्थानीय बसमा थिए तर दुर्घटनामा कोही घाइते भएनन् ।

# एआर रहमान र सायरा बानोको सम्बन्धविच्छेद

एजेन्सी । चर्चित ओस्कार विजेता संगीतकार एआर रहमान र उनकी श्रीमती सायरा बानोले सम्बन्धविच्छेदको घोषणा गरेका छन् । विवाहको २९ वर्षपछि दुवैले सम्बन्धविच्छेद गर्न लागेका हुन् ।

यो जोडीको विवाह भएको २९ वर्ष भइसकेको छ । अब उनका वकिलले आधिकारिक रुपमा सम्बन्धविच्छेदको पुष्टि गरेका छन् । यसले फ्यानहरुलाई पनि गहिरो धक्का दिएको छ । दुवैले भावनात्मक तनावका कारण यो निर्णय लिएको विज्ञप्तिमा उल्लेख छ ।

वकिलले विज्ञप्ति जारी गर्दै भनेका छन्- ’विवाहको धेरै वर्षपछि श्रीमती सायराले पति एआर रहमानसँग अलग हुने कठिन निर्णय लिएकी छिन् । उनीहरुको सम्बन्धमा धेरै भावनात्मक तनाव आएपछि यो निर्णय आएको हो । उनीहरुको गहिरो प्रेमका बाबजुद दम्पतीले आफूबीचको तनाव र समस्याले दुरी बनाएको पाइएको छ, जसलाई अहिले कुनै पनि पक्षले हटाउन नसकेको साइराले दुःख र पीडाबाट बाहिर निस्केको बताइन्। सायराले आफ्नो जीवनको यो कठिन अवधिबाट गुज्रिरहेको यस चुनौतीपूर्ण समयमा जनतासँग गोपनीयता र समझदारीको अनुरोध गरेकी छन् ।’ सम्बन्धविच्छेदको खबरका बीच एआर रहमानले सामाजिक सञ्जालमा पोस्ट गरेका छन् । उनले लेखेका छन्, ‘विवाहको ३० वर्ष पूरा गर्छौं भन्ने सोचेका थियौं तर परिस्थिति हेर्दा त्यस्तो हुन्छ जस्तो लाग्दैन । हाम्रो हृदय यति टुटेको छ कि यी टुटेको हृदयको बोझले भगवानको सिंहासन पनि काँप्न सक्छ ।

भाँचिएको भागले फेरि आफ्नो ठाउँ पाउँदैन। यद्यपि, हामीले टुटेका चीजहरूमा पनि केही अर्थ खोज्नुपर्छ । यस कठिन समयमा हाम्रो गोपनीयताको सम्मान गर्नु भएकोमा हाम्रा सबै साथीहरूलाई धन्यवाद ।’ एआर रहमान र सायरा बानोले सन् १९९५ मा विवाह गरेका थिए । दम्पतीका खतिजा, रहिमा र आमिन गरी तीन सन्तान छन् ।

# फिल्म “परालको आगो” मा सुहाना अनुबन्ध

काठमाडौं । कथाकार गुरुप्रसाद मैनालीको चर्चित कथासंग्रह ‘ नासो’ मा सङ्गहित ‘परालको आगो’ कथामा आधारित भएर निर्माण हुन लागेको फिल्ममा अभिनेत्री सुहाना थापा मुख्य भूमिकामा अनुबन्धित भएकी छन् । फिल्म निर्माण कम्पनी हरिओम सिने मेकर्सको तर्फबाट निर्माता सुशील पोखरेलले शुक्रबार सुहानासँग कागजी सम्झौता गरेका हुन् । यस फिल्ममा सुहाना गौंथलीको भूमिकामा देखिनेछिन् ।

फिल्म ‘ए मेरो हजुर ३’बाट डेब्यु गरेकी सुहानाले पहिलोपटक घरबाहिरको फिल्ममा काम गर्न लागेकी हुन् । गत वर्ष फिल्म ‘एक भागवत् एक गीता’मा देखिएकी उनले ‘ए मेरो हजुर ४’मा पनि प्रमुख भूमिका निभाएकी छन् ।

’परालको आगो’लाई भने लक्ष्मण सुनारले निर्देशन गर्नेछन् । आगामी वर्ष २०८२ को दशैंमा प्रदर्शन लक्ष्य राखिएको फिल्ममा सुशील देवकोटाको लेखन रहनेछ । यो फिल्म आजभन्दा करिब ४५ वर्षअघि ‘परालको आगो’ कथामा निर्देशक प्रताप सुब्बाले पनि निर्माण गरेका थिए । यसपटक भने लोकेसन, प्रस्तुतिकरण र पटकथालाई फरक किसिमले प्रस्तुत गरिने निर्माता पोखरेलको भनाई छ ।

केही दिनअघि मैनाली कथा पुरस्कार ट्रस्टको तर्फबाट कथाकार मैनालीका छोरा माधवप्रसादले निर्माता सुशील पोखरेललाई ‘ कथाको भाव र मर्म’ नबिग्रने गरी फिल्म निर्माणका लागि मञ्जुरी दिएका थिए ।



प्रकाशक / कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ अङ्क १८ ने.सं. ११४५ थिंलाथ्व तृतीया मंसीर १९ गते बुधबार, २०८१ 04 Dec. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## उपनिर्वाचनको अन्तिम परिणाम : दलहरुकै बर्चश्व कायम



काठमाडौं । स्थानीय तहको रिक्त ४१ पदका लागि आइतबार भएको उपनिर्वाचनको सबै नतिजा सार्वजनिक भएको छ । नतिजा अनुसार सबैभन्दा वढी सिट नेपाली कांग्रेसले जितेको छ । त्यसपछि वढी सिट नेकपा माओवादी केन्द्रले जितेको छ । सतारुढ दल नेकपा एमाले भने तेश्रो स्थानमा ढकेलिएको छ ।

संसदीय निर्वाचनमा दोश्रो ठूलो दलको रुपमा उदाएको एमाले स्थानीय निकायको यो उपनिर्वाचनमा तेश्रोमा ढकेलिएको हो । एमालेलाई पछि पार्दै संसदीय निर्वाचनमा निकै थोरै सिट ल्याएर तेश्रो ठूलो दल बनेको माओवादी दोश्रो धेरै सिट जित्न सफल भएको हो ।

अन्तिम नतिजा अनुसार काग्रेसले कुल १९ सिट जितेको छ । माओवादीले ११ र एमाले ८ सिटमा सिमित भएको हो । यसअघिको २०७९ को निर्वाचनमा कांग्रेसले २७ र माओवादीले आठ सिट जितेको थियो । परिणामले कांग्रेस पहिलो दल भए पनि संख्याको हिसावले निकै तल झरेको छ । माओवादी भने माथि उक्लिएको छ । उपनिर्वाचनमा यीबाहेक जसपाले दुई सिट जितेको छ । उपनिर्वाचनमा रास्वपा, एकीकृत समाजवादी, नेमकिपा र स्वतन्त्रले पनि एकएक सिट जितेको छ । यसले उपनिर्वाचनमा दलहरुकै बर्चश्व कायम रहेको देखाएको छ । साथै देशमा हाल कायम रहेको राजनीतिक दलको विकल्प अझै नरहेको यस निर्वाचन परिणामले देखाएको छ ।

निर्वाचन आयोगका अनुसार काठमाडौंको कीर्तिपुर नगरपालिकाका प्रमुख, दोलखाको गौरीशङ्कर गाउँपालिका उपाध्यक्ष, हुम्लाको सर्केगाड गाउँपालिका उपाध्यक्ष र उदयपुरको बेलका नगरपालिका-९ को वडाध्यक्षको मतगणना सम्पन्न भएसँगै सोमबार राति मतपरिणाम सार्वजनिक भएको हो ।

कीर्तिपुर नगरपालिकाको प्रमुखमा कांग्रेसका कृष्णमान डङ्गोल पाँच हजार तीन सय ३४ मत प्राप्त गरी विजयी भएका छन् । उनका निकटतम प्रतिस्पर्धी नेपाल कम्युनिष्ट पार्टी (माओवादी केन्द्र)का शिवशरण महर्जनले चार हजार पाँच सय ५५ मत प्राप्त गरे । यस्तै, नेपाल कम्युनिष्ट पार्टी (एमाले)का सुरेन्द्र मानन्धरले चार हजार तीन सय २७ र स्वतन्त्र उम्मेदवार राजमान महर्जनले दुई हजार ३६ मत प्राप्त गरेका छन् ।

दोलखाको गौरीशङ्कर गाउँपालिकाको उपाध्यक्षमा नेपाल कम्युनिष्ट पार्टी (एमाले) का उम्मेदवार उमा लुङ्गेली मगर शेर्पा विजयी भएका छन् । उनले दुई हजार आठ सय पाँच मत प्राप्त गर्दा निकटतम प्रतिस्पर्धी नेपाल कम्युनिष्ट पार्टी (माओवादी केन्द्र)का उम्मेदवार निम लेकी शेर्पाले दुई हजार छ सय मत प्राप्त गरिन् ।

यस्तै, नेपाली कांग्रेसका उम्मेदवार पासदिकी तामाङले एक हजार सात सय २७ मत, राष्ट्रिय प्रजातन्त्र पार्टीका मनकुमारी श्रेष्ठले एक सय १८, राष्ट्रिय स्वतन्त्र पार्टीका गोमा श्रेष्ठले

बाँकी पेज ७ मा

## मध्यपुर महोत्सव–२०८१ तयारीले तिव्रता लिदैं !




भक्तपुर । मध्यपुर थिमि नगरपालिकाले यही पौष १२, १३ र १४ गते मध्यपुर महोत्सव-२०८१ को आयोजना गर्दैछ । जसमा ८० भन्दाबढी स्थानमा २ सय भन्दा बढी स्टलहरु रहने भएको छ । महोत्सवमा नगरको प्रवेश स्थल शंखधर चोकदेखि नगदेश र बोदे हुँदै तिगनिको नीलबाराही सम्मका परम्परागत नेवा बस्तीक्षेत्रमा ८० भन्दा बढी टोलहरुमा २ सय भन्दा बढी स्टल रहने आयोजक सचिवालयले जनाएको हो ।

महोत्सवका लागि टोलटोलमा तयारीहरु तीव्र रुपमा भइरहेको छ । महोत्सवका विशेष आकर्षणमा यहाँको लोपोन्मुख मौलिक पेशा व्यवसाय रहनेछ । महोत्सवको अवसर पारेर टिगनीको टिगनी बजी (चिउरा)लाई पुनर्जिवित गर्ने तयारी भइरहेको छ । ऐतिहासिक तथा परम्परागत टिगनी क्षेत्रबाट लोप भैसकेको टिगनी बजीलाई

बाँकी पेज ७ मा

## महोत्सवलाई विश्वविद्यालयको रुपमा अध्ययन अध्यापन गर्ने थलोको रुपमा विकास गर्ने




भक्तपुर । "महोत्सवलाई विश्वविद्यालयको रुपमा अध्ययन अध्यापन गर्ने थलोको रुपमा विकास गर्ने छौं ।" उक्त भनाई कृषिजन्य उत्पादन विक्रीवितरक व्यवसायीहरुको भेलामा नगर प्रमुख सुनिल प्रजापतिले बताएका हुन् । भक्तपुर नगरपालिका बजार अनुगमन समिति र कृषि समितिको आयोजनामा भक्तपुर महोत्सव २०८१ लाई लक्षित गरी कृषिजन्य उत्पादन विक्री

बाँकी पेज ७ मा



## जंगली जनावरभन्दा सेना र निकुञ्जका कर्मचारीसंग डर

**कुमार यात्रु तामाङ**

काठमाडौं । चितवन राष्ट्रिय निकुञ्जको मध्यवर्ती क्षेत्रमा बसोबास गर्ने स्थानीयहरु निकुञ्जमा रहेका बाघ, हात्ती, गैंडा लगायतका वन्यजन्तुभन्दा त्यसको रखवारी गर्न खटिएका नेपाली सेना र निकुञ्जका कर्मचारीसंग बढी डर लाग्ने गरेको बताएका छन् ।

चितवनको भरतपुर नगरपालिका वडानम्बर २२ स्थित पटिहानीका ६५ बर्षिय हरिचन बोटेको अनुभवमा 'निकुञ्जका वन्यजन्तुहरु मानवमैत्री छन्, वन्यजन्तुलाई चलाएन भने आफ्नो बाटोमा लाग्छन् । तर सेनाहरु भने गाउँ पसेर स्थानीयबासीलाई हप्काउने र दु:ख दिने गर्दछन् ।' यो समस्या चितवनको भरतपुर क्षेत्रमा मात्र हैन, नवलपुर क्षेत्रमा पनि त्यस्तै रहेको छ । नवलपुरस्थित मध्यविन्दू कोल्वाकी शिल्पा बोटेको भनाइ पनि हरिचनकै जस्तो छ । उनको अनुभव छ, 'निकुञ्जमा भोर्लाको पात टिप्न जाँदा वन्यजन्तु भेटियो भने तर्कन्छन्, तर सेनाले भेट्यो भने हातपात र कुटपीट गर्छन् ।'

देशकै जेठो निकुञ्ज चितवन राष्ट्रिय निकुञ्ज वरिपरिको ७ सय ५० वर्गकिलोमिटर क्षेत्रमा मानवबस्ती सहितको मध्यवती क्षेत्र रहेको छ । निकुञ्जसँग सीमाना जोडिएका चितवनसहित, नवलपरासी (नवलपर) र मकवानपुर तथा पर्सा समेत चार जिल्लाका ८० हजार घरधुरी मध्यवर्ती क्षेत्रमा बसोबास गर्दछन् । एक महानगरपालिका, आठ नगरपालिका र तीन गाउँपालिका गरेर १२ स्थानीय तहका १ सय २२ ओटा वडाहरू मध्यवर्ती क्षेत्रमा पर्दछ ।

वि.सं.२०२९ मा राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण ऐन जारी भएपछि २०३० सालको असोजमा चितवन निकुञ्ज स्थापना भएको हो । निकुञ्जको सुरक्षामा नेपाली सेना खटिएको छ । सरकारले २०५२ फागुन २८ गतेबाट 'मध्यवर्ती क्षेत्र व्यवस्थापन नियामावली २०५२' लागु गरेको हो । यसले मध्यवर्ती क्षेत्रको सीमाङ्कन, व्यवस्थापन, उपभोक्ता समिति गठन, मध्यवर्ती क्षेत्रका निषेधित कार्यहरू, वन विकाससम्बन्धी व्यवस्था, सामुदायिक विकास, रकम जम्मा गर्ने र क्षतिपूर्ति निर्धारणलगायतको सीमा निर्धारण गरेको छ । चितवनमा भने २०५३ सालको मङ्सिर १७ गतेबाट चितवन राष्टिय निकुञ्जका मध्यवती क्षेत्र लागू भएको हो । त्यही मध्यवर्ती क्षेत्रका स्थानीयहरु अहिले निकुञ्ज प्रशासनको सास्ती व्यहारिरहेका छन् ।

आफ्नो भूमिमा पराइ भएकाहरु

चितवन राष्ट्रिय निकुञ्ज त्यहाँका आदिवासी बोटे, थारु, कुमाल तथा चेपाङलाई विस्थापन

बाँकी पेज ४ मा

# सडक अतिक्रमणले नेवार जातिको सांस्कृतिक मुटुमै प्रहार

गणेश राई

स्थानीय नेवार आदिवासीको मौलिक थलो र सांस्कृतिक विरासतको बेवास्ता गर्दै 'गोदावरी क्षेत्रको मूलबाटो फराकिलो बनाउने' निर्णयले अन्यायको तघारो तेर्सिएको स्थिति छ । स्थानीय जनमतबाट निर्वाचित जनप्रतिनिधिले बाडेगाउँको बाटा फराकिलो पार्न डोजर पठाउन थालेपनि स्थानीयहरू प्रतिरोधमा उत्रिन बाध्य छन् । यो घटना पटक-पटक दोहोरिदै आएको छ । सर्वोच्चको अन्तरिम आदेशपछि पहुँचवार जनप्रतिनिधि र पूर्व जनप्रतिनिधिहरू 'पर्ख र हेर' स्थितिमा रहेका छन् । स्थानीयवासीलाई थकाउने र मौका पर्नासाथ सडक छेउका संरचनाहरू भत्काएर सडक विस्तार गर्ने दाउ पर्खिरहेका छन् ।

वरिपरि परम्परागत घरहरू विस्तारै थोत्रिदै गएका छन् । यतिसम्म कि देउता बिसाउने पाटीहरू क्रमशः थोत्रिदै छन् । अब क्रमशः स्थानीयबासीको मनस्थिति गल्दै गएको हो कि भन्ने स्थिति छ । 'हाम्रो घरजग्गाको मुआब्जा र क्षतिपूर्ति देऊ अनि छाडौंला,' पूर्वप्रधानपञ्च पशुपति महर्जन भन्नुहुन्छ, 'तर यी मन्दिरहरू सार्न हुँदैन । भगवानको थान सार्न मिल्दैन । सडक वारि-पारिका कालभैरब, कुमारी, बुद्ध, गणेशको मन्दिर सार्न, मास्न पाइँदैन । यदि बाटो चाहिएको भए, अन्तै बाटो बनाऊ ।'

गोदावरी नगरपालिका वडा नं.१४ का वडाध्यक्ष निरोज बज्राचार्यका अनुसार संघ, प्रदेश र स्थानीय सरकारको कानुन, नीति, नियम परस्पर बाझिएको ऐतिहासिक तथा सांस्कृतिक सम्पदा क्षेत्रको सडक विस्तारमा बाधा अड्चन आएको हो । 'पुखाहरूले रथजात्राका निम्ति बनाएको टोलको बाटोलाई सडक बनाएपछि समस्या आएको हो,' बाडेगाउँका स्थानीयबासी वडाध्यक्ष बज्राचार्य भन्नुहुन्छ, 'स्थानीय यथार्थ बुझेर, ऐतिहासिक तथा पुरातात्विक सम्पदा क्षेत्रमा सडक बनाउँदा कस्तो नीति अपनाउने भन्नेबारे व्यवहारिक कानुन नहुँदा र तीन तहको ऐन कानुन परस्पर बाझिएकाले समस्यामाथि समस्या थपिएको स्थिति छ । नेवार बस्तीमा बाटोमा घर बनेका होइनन्, सबैका घरजग्गाको नक्सा, धनीपुर्जाहरू छन् । नियमसँगत कर तिर्दै आएका छौं ।'

वडाध्यक्ष बज्राचार्य सडक विस्तारका निम्ति संघीय सरकारले पीडितहरूको आधिकारिक तथ्यांक तयार पार्नसक्नु पर्ने बताउनु हुन्छ । 'अध्ययन, मूल्यांकन गरेर सातदोबाटोदेखि गोदावर सिम्मका पीडितहरूका निम्ति मुआब्जा र क्षतिपूर्ति दिलाउन बढीमा एकदेखि डेढ अर्ब रुपैयाँमा समस्या सल्टिन सक्छ,' सडकले यस क्षेत्रका करिब दुई सय घर परिवार पीडित रहेको उल्लेख गर्दै बज्राचार्य भन्नुहुन्छ, 'त्यसो भएमा कोही विस्थापित हुनुपर्दैन ।'

सडक अगाडि घर परेका परिवारलाई एकीकृत नमुना बस्ती बसाउन पनि सकिन्छ । तर त्यसनिम्ति कुनै योजना बनेको छैन । त्यसो गर्दैगर्दा सकेसम्म इतिहासका गौरव सम्पदाहरू नमासौं । पुनःस्थापना गरेर व्यवस्थित तुल्याउन सक्छौं । त्यसका निम्ति संघीय सरकारको ऐन, कानूनले स्पष्ट गरिदिन जरुरी छ ।' बाडेगाउँ क्षेत्रमा करिब ३० घर सडक पीडित छन् ।

भौगोलिक अवस्थितिअनुसार सांस्कृतिक सम्पदा संरक्षणका निम्ति बाडेगाउँको पूर्वतर्फ विचबाट वैकल्पिक सडक थप विस्तार हुन सक्छ । यसभन्दा पूर्वतर्फ गोदावरी खोला रहेको छ भने उक्त खोलाको करिडोरसमेत सडक विस्तार हुन सके गोदावरी पुग्न सहज हुनेछ । यस्तै, बाडेगाउँको पश्चिमतर्फ वैकल्पिक सडक मार्ग निर्माण हुनसक्ने वडाध्यक्ष बज्राचार्यको कथन छ ।

ऐतिहासिक लोकेश्वर र बन्देग्राम

प्राचीन नेपालमा सन् ४०० देखि ७५० सम्म करिब ३५० वर्ष लिच्छवि काल रहेको इतिहास पाइन्छ । बाडेगाउँ लिच्छविकालीन बस्ती रहेको इतिहासकारले उल्लेख गरेका छन् । जसअनुसार लिच्छवि राजा शिवदेवका दुइ छोरा वृषदेव वर्मा र बालार्चन वर्मा थिए । जेठो छोरा राजा वृषदेवले यहाँ षडक्षरी लोकेश्वर (बुधवा द्यो) चैत्य र बौद्ध गाउँको स्थापना स्थापना गरेको जनश्रुति र अभिलेखहरू उल्लेख पाइन्छ । बज्राचार्य थरका पुजारीले लोकेश्वर मन्दिरको नित्य पूजा तथा अन्य धार्मिक कार्यहरू सञ्चालन गर्दै आएका छन् ।

यसको प्राचीन नाम बन्देग्राम, बन्देसपुर थियो । यहाँ बज्राचार्य र शाक्य थरका नेवार जातिको बाहुल्य रहेको छ । शाक्य र बज्राचार्यलाई बन्दे अर्थात् बडे भनिन्छ, जसको अर्थ दीक्षित भन्ने हुन्छ । त्यसैले यो जातिको बसोबास थलोलाई बन्देसपुर र बन्देग्राम भएको भन्ने छ । धातुका भाँडाकुँडा निर्माण गर्ने भएकाले शाक्य र बज्राचार्यलाई बाँडा पनि भन्ने गरिन्छ । त्यसैले थलो बाँडागाउँ भनियो । र पछि अपभ्रंश भई बाडेगाउँ भएको हो ।

काठमाडौं उपत्यकाका बौद्धमार्गी नेवार समुदायमा श्रावण शुक्ल प्रतिपदादेखि भाद्र शुक्ल प्रतिपदासम्म एक महिना गुँलाधर्म पर्व मनाउने परम्परा छ । गुँलाधर्म अवधिभर प्रत्येक बुधबार बुधवा द्योको पूजा गर्ने र बुधवा मेला लाग्दछ । बत्ती बाल्ने, भजन गर्ने, नामसंगति स्तोत्र पाठ गर्ने, पूजापाठ गर्ने गरिन्छ । एकै दिनमा उपत्यकाको चारै बुद्धको दर्शन गर्दछन् । त्यसमा बाडेगाउँको यस षडक्षरी लोकेश्वरको समेत परिक्रममा गर्ने परम्परा रहेको छ । विशेष गरी आफ्नो आफन्तजन गुमाएका परिवारका सदस्यहरूले मृतात्माको चिर शान्तिको कामना गर्दै दीप प्रज्ज्वलन गर्ने गर्दछन् । इन्डिजिनियस भ्वाईस

# उपनिर्वाचनले माओवादी एक्लै लड्दा पनि जित्छ भन्ने पुष्टि भएको प्रचण्डको दाबी

काठमाडौं । नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल प्रचण्डले उपनिर्वाचनबाट माओवादी केन्द्र एक्लै चुनाव लड्दा पनि जित्छ भन्ने पुष्टि गरिदिएको दाबी गरेका छन् । उपनिर्वाचनको नतिजाले उत्साहित माओवादीका अध्यक्ष प्रचण्डले मंगलबार एक विज्ञप्ति जारी गर्दै पार्टीले उत्साहजनक सफलता प्राप्त गरेको भन्दै मतदातालाई आभार प्रकट गरेका छन् । निर्वाचित जनप्रतिनिधिको संख्या र जनमत दुवै हिसाबबाट उत्साहजनक सफलता हासिल गरेको उनको दाबी छ । यो सँगै प्रचण्डले पार्टीले अघि सारेका एजेण्डा र अघि बढाउन खोजेको अभियानको जनताले अनुमोदन गरेको पुष्टि भएको जिकिर गरेका छन् ।

पार्टीले यो निर्वाचनलाई भ्रष्टाचारका विरुद्ध र सुशासनका पक्षको नयाँ सङ्कल्पको रुपमा लिएको उनको भनाई छ । प्रेस विज्ञप्तिमा प्रचण्डले उल्लेख गरेका छन् । "हाम्रो पार्टीले यो निर्वाचनलाई भ्रष्टाचारका विरुद्ध र सुशासनका पक्षको नयाँ संकल्पको रुपमा लिएको थियो, खासगरी हाम्रो पार्टी नेतृत्वको सरकारले अघि सारेको सुशासन, सामाजिक न्याय र आर्थिक समृद्धिको एजेण्डालाई जनस्तरसम्म पुर्याउँदै पार्टीको आगामी बाटो र दृष्टिकोण सुस्पष्ट गर्ने अवसरको रुपमा उपनिर्वाचनलाई लिएका थियौं, निर्वाचित जनप्रतिनिधिको संख्या र जनमत दुवै हिसाबबाट पार्टीले उत्साहजनक सफलता प्राप्त गरेको छ"

विभिन्न स्थानमा अवाञ्छित गठबन्धन बनाएको भएपनि ती गठबन्धनलाई पनि चिर्न पार्टी सफल भएको प्रचण्डको निष्कर्ष छ । यसबाट माओवादी केन्द्रले अघि सारेका एजेण्डा र अघि बढाउन खोजेको अभियानको जनताले अनुमोदन गरेको पुष्टि हुने प्रचण्डको ठहर छ ।

उनले आगामी दिनमा सुशासन, सामाजिक न्याय र आर्थिक समृद्धिको मूल एजेण्डामा केन्द्रित रहेर सबै जनप्रतिनिधिलाई पूर्णरुपमा जनताको सेवामा परिचालन गर्ने प्रतिबद्धता व्यक्त गरेका छन् । उनले थप उल्लेख गर्दै भनेका छन्," यो उपनिर्वाचनमार्फत जनताले प्रकट गरेको अभिमतलाई हाम्रो पार्टीले आफ्नो एजेण्डा र आफ्नै एकल पहिचानका साथ प्रतिस्पर्धा गर्न प्राप्त गरेको जनादेशको रुपमा लिनेछ,' प्रचण्डले विज्ञप्तिमा लेखेका छन्, 'यो अपार जनविश्वासलाई अझ सुदृढ बनाउँदै जनताको जीवनस्तर बदल्ने अभियानलाई दृढता पूर्वक अघि बढाउने प्रतिबद्धता व्यक्त गर्दछु ।

# जलचर संरक्षणको लागि हेरालु परिचालन

मुगु । मुगु कर्णाली नदीको जलचर तथा जैविक विविधताको संरक्षण तथा निगरानीको लागि हेरालु परिचालन गरिएको छ । कर्णाली नदीको आसपासमा बसोवास गर्ने बस्तीहरुलाई केन्द्रित गर्दै मुगु कर्णाली नदीमा पाईने माछा, भ्यागुताजस्ता जीवहरुको संरक्षण तथा निगरानीको लागि ९० जना हेरालु राखिएको छ । ६ वटा समूह मार्फत एक समहमा १५ जनाको टोलीले पालै पालो गरेर कर्णाली नदि किनारमा माछा तथा अन्य जीवहरुको संरक्षणको लागि हेरालु राखिएको हो । युएसआईडी जैविक विविधता जंग जंगलको आर्थिक सहयोग, हिमाली ग्रामीण युवा समाज विकास केन्द्र हिरिसडेक नेपालको प्राविधिक सहयोगमा, समुदायको संलग्नतामा मुगु कर्णाली नदीका जलचर तथा जैविक विविधताको संरक्षण परियोजना अन्तर्गत यो कार्यक्रम लागु भएको छ । यसले गर्दा कर्णाली नदीमा पाईने असला जातका माछासँगै अन्य जीवहरु लोप हुने अवस्था र भुराभुरीको पनि विनास हुने भएको हुदा यसलाई संरक्षण गर्न जलचर संरक्षण, निगरानी अर्थात हेरालु राखिएको परियोजना अधिकृत मेरिना राना मगरले बताईन । उनका अनुसार यो कार्यक्रम छायानाथ रारा नगरपालिकाको वडा नं १,४,३,११,१२,१३ र १४ गरि ७ वटा वडाहरुमा लागु भएको बताईन । विगतका दिनहरुमा यहाँका जुनसुकै मानिसहरुले विभिन्न प्रकारका साधनहरु जस्तै करेन्ट, विषादीजस्ता बस्तुहरु प्रयोग गरेर माछा मार्ने गरेका थिए भने अहिले यो परियोजना लागु भएपछि यस्ता साधनहरु प्रयोग गर्नबाट हटेको जानकारी दिईन । यसका कारण बस्तीहरुमा सामुदायिक जलचर संरक्षण समूहको निगरानी राख्ने व्यवस्था गरेपछि अहिले बिस्तारै त्यस्तो प्रवृद्धि हटेको महसुश गरिएको छ । मुगु कर्णाली जलचरको निगरानीमा खटिने टोलीलाई समूहमार्फत आवश्यक पर्ने ज्याकेट, टर्च लाईट, जुत्ता, हेल्मेट, दुरविनजस्ता सामग्री प्रदान गरिएको पनि अवगत गराइन । यति मात्र नभई यो परियोजनाले समुदायमा आधारित जलचर र जैविक विविधता संरक्षणको लागि मुगु कर्णाली नदि वरीपरि बसोवास गर्ने समुदायको क्षमता सुधार र सुदृढिकरण गर्ने अपेक्षा राखिएको छ । यता हातेमालो जलचर संरक्षण समूहकी रामचन्द्रा भाम रोकायाका अनुसार पछिल्लो समय यो कार्यक्रमको थालनी भएपछि यहाँका युवादेखि वृद्धसम्म सकारात्मक रहेको बताईन । विगतमा माछा मार्नकै निम्ति नदी किनारमा जाल, पासा हाल्ने अवस्था थियो भने अहिले यो कार्य थालनी गरेपछि राम्रै प्रतिफल पाएकोले खुसी व्यक्त गरिन । जलचर निगरानिमा जाँदा कुनै त्यस्तो व्यक्ति फेला परेमा समूहले नै कार्वाही गर्ने गरेको पनि उनले सुनाईन ।

# १० हजार भन्दा बढी बालबालिका बालश्रममा

काठमाडौं । शिक्षा, विज्ञान तथा प्रविधि मन्त्री विद्या भट्टराईले अहिले पनि १० हजार भन्दा बढी बालबालिका विभिन्न क्षेत्रमा बालश्रमिकका रुपमा रहेको जानकारी गराएकी छ । अन्तर र्ष्ट्रिय दासता उन्मुलन दिवसको सन्दर्भ पारेर राजधानीमा आयोजना गरिएको समाज सेवा तथा मानव अधिकारमा महिला र बालबालिका (सिविस) को ३० औं वार्षिकोत्सवमा उनले सिविसका संघर्ष, योगदान र इतिहासको ३० वर्षे योगदानले सामाजिक परिवर्तनको अभियानमा महत्वपूर्ण भूमिका निर्वाह गरेको बताए ।

उनले शिक्षा मन्त्रालयले अनिवार्य तथा निःशुल्क शिक्षा कार्यान्वयन कार्ययोजना तयार पारेको बताउदै, "अनिवार्य तथा निःशुल्क शिक्षा ऐन २०७५ को मर्म, भावना र संविधानले निर्देश गरेअनुसार कोही पनि व्यक्ति शिक्षाबाट वञ्चित हुन नपरोस भने पनि अझै ५ प्रतिशत बालबालिका शिक्षाको पहुँचभन्दा बाहिर छन्, यो संख्या धेरै हो । कक्षा ८ र ९ मा सबभन्दा धेरै विद्यार्थी ड्रप आउँट छन् । त्यसैले २०८५ सम्म सबै नागरिकलाई आधारभूत शिक्षाको पहुँचमा ल्याउन लागिरहेका छौं ।"

पढ्ने जिम्मा राज्यले लिन्छ भनेर बनाएको ऐन पूर्ण रुपमा कार्यान्वयनमा ल्याउन मन्त्रालयले 'अनिवार्य तथा निःशुल्क शिक्षा कार्यान्वयन कार्ययोजना २०८१' निर्माण गरेको बताउदै मन्त्री भट्टराईले २०८३ सम्म यसलाई कार्यान्वयन गर्नेगरि आफू अगाडि बढेको बताए । शिक्षामा राज्यले निर्धारण गरेको बजेट अपुग रहको भन्दै उनले राज्यले शिक्षामा लगानी थप गर्न तयार हुनु पर्ने बताए । मन्त्री भट्टराईले भनें, "शिक्षा राज्यको दायित्व हो, त्यसमा लगानी बढाए मात्र देशको भविश्य सुनिश्चित हुन्छ । शिक्षा ऐनलाई कार्यान्वयनमा ल्याउन २० प्रतिशत थप आवश्यक पर्छ, त्यसका लागि राज्य तयार हुनुपर्छ । यो ऐनलाई पूर्ण रुपमा कार्यान्वयनमा ल्याउन सकेमात्र समाजलाई सबै प्रकारका विभेदबाट अन्त्य गर्न सकिन्छ ।"

उनले कक्षा १२ मा २०५६ देखि परीक्षा दिन नपाएका विद्यार्थीलाई अन्तिम पटक मौका परीक्षा र स्नातक तहमा २०५८ सालदेखिका रोकिएका विद्यार्थीका लागि मौका परीक्षाको व्यवस्था गरिएको बताए । एसईई परीक्षामा नन्ग्रेडेड नराख्न र त्यस्ता विद्यार्थीलाई सिटिईभिटी मार्फत प्रि-डिप्लोमा कोर्षमा सहभागि गराएर सीप र क्षमतालाई शिक्षासंग जोडेर लैजाने गरि योजना अगाडि ल्याएको उनले बताए ।

कार्यक्रममा विधायन व्यवस्था समितिकी सभापति तुलसा दाहालले बाल अधिकारको प्रत्याभुतिका निम्ति सरकार, संसद र नागरिक समाजको महत्वपूर्ण भूमिका हुने चर्चा गर्दै संविधानमा बालबालिकाका अधिकारका विषयले उचित स्थान पाए पनि कार्यान्वयनको चरणमा भने ढिलाई भएको बताए । राष्ट्रिय मानव अधिकार आयोगका पूर्व सदस्य एवम् बाल अधिकारकर्मी गौरी प्रधानले सिविसले आफ्नो अभियानमार्फत उपत्यकामा आधुनिक दासताको यातनापूर्ण जीवन बिताई रहेका घरेलु बालश्रमिकको न्यायका लागि अभियान छेडेर राज्यलाई कानून बनाउने तहमा पुर्याएको बताए । सिविसका अध्यक्ष विमला ज्ञवालीले सिविसको ३० वर्षे अभियानमा घरेलु बालश्रमिक, छिमेकी, आफन्त, शिक्षकलगायतबाट यौन दुर्व्यवहारमा परेका दुई हजारभन्दा बढी बालबालिकाको उद्धार र ३०० भन्दा बढीको अदालतमा मुद्दा दायर गरेर पीडित बालबालिकालाई क्षतिपूर्ति र पीडकलाई सजाय दिन सफल भएको जानकारी दिए ।

सिविसकी संस्थापक अध्यक्ष शान्ति अधिकारीले सिविसले सामाजिक न्यायका निम्ति आधुनिक दासताको रुपमा रहेको घरेलु बालश्रम उन्मुलनको लागि महत्वपूर्ण कार्यहरु गर्दै आएको उल्लेख गरिन् । कार्यक्रममा सिविसका पैरवी सल्लाहकार युवराज घिमिरेले सिविसले सामाजिक न्यायको क्षेत्रमा बिताएको ३० वर्षे यात्राको विवरण प्रस्तुत गरेको थियो भने राष्ट्रिय मानव अधिकार आयोगका सचिव मुरारीप्रसाद खरेल, मन्थली नगरपालिका रामेछापका लव श्रेष्ठ, एनएसीजीका अध्यक्ष किरण थापा, बालबालिकाको तर्फबाट लोकेशबहादुर खड्का, बुढानीलकण्ठ माविका शिक्षक गणेश श्रेष्ठ, संस्थाकी महासचिव अनिता पाण्डे, सुधा र लुनिभा श्रेष्ठलगायतले सिविसको ३० वर्षे योगदानको चर्चा गर्दै बालअधिकारप्रतिको जागरण र संरक्षणमा महत्वपूर्ण भूमिका निर्वाह गरेको बताए ।

कार्यक्रममा दासताविरुद्धका अभियानमा लागेकी अभियन्ता उर्मिला चौधरीलाई सम्मान गर्नुका साथै सिविसको अभियन्ता प्रमोद आचार्यलाई २५ वर्षे दीर्घ सेवा सम्मान र केदार मगरातीलाई १७ वर्षे सेवावापतको दीर्घ सेवा सम्मान प्रदान गरिएको थियो ।

# भक्तपुरमा १५१ जना एड्स संक्रमित




भक्तपुर । जिल्लामा कुल एक सय ५१ एचआईभी एड्स संक्रमित रहेको छ । उनीहरु सबैले नियमित औषधि सेवन गरिरहेको जनस्वास्थ्य कार्यालय भक्तपुरले जनाएको छ । ३७ औँ विश्व एड्स दिवसको अवसरमा आइतवार जनस्वास्थ्य कार्यालयले राधेराधेस्थित भाटभटेनी परिसरमा आयोजना गरिएको दिप प्रज्ज्वलन कार्यक्रममा कार्यालय प्रमुख शान्तिराम खतिवडाले सो जानकारी दिएको हो ।

उनले एचआईभी एड्स रोग नलुकाई उपचार गर्न आग्रह गरे । उनले एड्स रोग पनि अन्य रोगहरु जस्तै सामान्य रोग बन्दै गएको बताउँदैं रोगविरुद्ध जित हासिल गर्न मनोवल उच्च राख्न आग्रह गरे । "सुरुमा रोग लाग्नै नदिनेतर्फ विशेष ध्यान दिनुपर्छ । रोग लागिसकेपछि उपचार गरेर मनोबल उच्च बनाउनुपर्छ," उनले भने ।

कार्यक्रममा नर्सिङ अफिसर रुपा प्याठले एचआईभी एड्सका तथ्यांकहरु पेश गर्दै नेपाल, एसिया प्रसान्त क्षेत्र र विश्वमै यो रोगको अवस्थाको बारे जानकारी दिए । तथ्यांक अनुसार नेपालमा हरेक दिन एक जना मानिसहरुमा एचआईभी संक्रमित हुने गरको छ । स्वास्थ्य तथा जनसंख्या मन्त्रालय राष्ट्रिय एड्स तथा यौन रोग नियन्त्रण केन्द्र टेकुले यसवर्षको ३७ औ विश्व एड्स दिवसको अवसरमा विश्व र नेपालमा एचआईभी र एड्सको अवस्थाको बारेमा सार्वजनिक तथ्यांक अनुसार सन् २०२३ को अन्त्यसम्म नेपालमा ३० हजार तीन सय व्यक्तिहरुमा एचआईभी संक्रमण भएको अनुमान छ ।

सन् २०२३ मा ४५७ व्यक्तिहरुमा एचआईभीको नयां संक्रमण भएको अनुमान गरिएको छ जुन सन् २००० को तुलनामा ९१ प्रतिशतले घटेको छ । केन्द्रका निर्देशक डा सर्वेश शर्माका अनुसार मुलुकमा सन् २०२३ सम्ममा एचआईभी सङ्क्रमण ९१ प्रतिशतले घटेको छ । सन् २०१० यता विश्वमा एचआइभी सङ्क्रमण ३९ प्रतिशतले घटेको छ । यसैगरी एड्सबाट मृत्युवरण गर्नेको संख्या पनि आधाले घटेको छ । सन् २०२३ को अन्त्यसम्म एसिया प्रशान्त क्षेत्रमा ६७ लाख व्यक्तिहरुमा एचआईभी संक्रमण भएको अनुमान छ । एचआइभी सङ्क्रमण ७५ प्रतिशतले घटाउने देशमध्येमा नेपाल पनि एक रहेको जनाइएको छ । यस्तै सफलता केन्या, मलावी र जिम्बावेले हासिल गरेको केन्द्रले राखेको तथ्यांकमा उल्लेख छ ।

नेपालमा पनि सन् २०३० सम्ममा एड्सको महामारीलाई अन्त्य गर्ने लक्ष्यलाई हासिल गर्न ९५:९५:९५ र एचआइभीको जाँच र उपचारको रणनीतिमा आधारित भएर एचआइभी तथा एड्स सम्बन्धि कार्यक्रमहरु संचालन भइरहेको छ ।

'एड्स अन्त्यका लागि सबैको अधिकार सुनिश्चित गरौं' नाराका साथ आइतबार देशभर ३७ औं विश्व एड्स दिवस चेतना जागृत गर्ने विविध कार्यक्रमका साथ मनाइएको थियो । नेपालमा एचआईभी तथा यौन रोग रोकथाम र प्रतिक्रियाका लागि वि स २०४९ सालमा राष्ट्रिय एड्स तथा यौन रोग नियन्त्रण केन्द स्थापना भएको थियो ।

सन् २०३० सम्ममा नेपालमा एड्स इपिडेमिकलाई अन्त्य गर्ने परिकल्पना गरिएको छ । नयाँ एचआईभी सङ्क्रमण रोकथाम गर्ने, एचआईभी सङ्क्रमित व्यक्तिहरूको स्वास्थ्यसम्बन्धी परिणामहरूमा सुधार ल्याउने, एचआईभी सङ्क्रमित तथा मुख्य समूहहरूमा एचआईभी सम्बन्धित असमानताहरूमा कमी ल्याउने सरकारको योजना छ ।

सन् २०२६ सम्मका उद्देश्यहरूमा अनुमानित एचआईभी सङ्क्रमितमध्ये ९५ प्रतिशतको पहिचान गर्ने, एचआईभी सङ्क्रमण पुष्टि भएका ९५ प्रतिशत व्यक्तिको उपचार गर्ने, एआरटी सेवा लिइरहेका एचआईभी सङ्क्रमितमध्ये ९५ प्रतिशतमा भाइरल लोड सप्रेसन हासिल गर्ने, नयाँ एचआईभी सङ्क्रमणलाई ९० प्रतिशतले कम गर्ने (२०१० को आधारमा), आमाबाट बच्चामा एचआईभीको सङ्क्रमण उन्मूलन गर्ने सन् २०२६ का उद्देश्यहरु रहेका छन् ।

# प्रधानमन्त्रीको चीन भ्रमण: भैंसीमै सीमित हुने

काठमाडौं । अहिले नेपालका प्रधानमन्त्री छिमेकी मुलुक चीनको भ्रमणमा रहेका छन् । भारत र चीनको भ्रमणले ठूला र महत्वाकांक्षी योजनामा हस्ताक्षर हुने कुराले चर्चा पाउँछ । प्रधानमन्त्री जाँदा जति चर्चा गरिएको हुन्छ फर्किएर आउँदा सेलाइ सक्छ र चर्चै गर्नुनपर्ने विषय बहसमा आउँछ । यस अघिका प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डको भारत भ्रमणका क्रममा पनि सीमा र बिजुलीका कुरालाई ओझेलमा परेर भैंसीकै चर्चा भएको थियो । हाल प्रधानमन्त्री रहेका केपी शर्मा ओली पनि अहिले चीन भ्रमणमा छन् । उनी चीन जानुअघि निकै ठूला र राष्ट्रिय महत्वका विषयमा समझदारी बन्ने कुराले ठूलो चर्चा पायो । तर, यथार्थमा त्यस्तो भएन ।

नेपाल र चीनका प्रधानमन्त्रीको उपस्थितिमा नेपाल-चीनबीच भैंसीको मासु निर्यातदेखि चिनियाँ भाषा शिक्षकसम्मका ९ वटा समझदारी पत्रमा हस्ताक्षर भयो । भैंसीको मासु निर्यात गर्न सहमति भएको कुरा बाहिरिए लगत्तै प्रधानमन्त्री ओलीको विरोध सुरु भएको छ । खासमा प्रतिपक्षमा रहेको नेकपा माओवादी पक्षबाट भैंसी प्रसंग उठाउन थालिएको छ । प्रचण्डको भारत भ्रमणका क्रममा त्यो बेला प्रतिपक्षी दलको नेता भएका केपी ओलीले नै संसदमा भारतबाट प्रधानमन्त्रीले राँगा (भैंसी) मात्र ल्याएको भनेर चर्को विरोध गरेका थिए ।

चीन भ्रमणमा रहेका प्रधानमन्त्री ओली र चिनियाँ समकक्षी ली छ्याङको उपस्थितिमा विभिन्न समझदारी पत्रमा हस्ताक्षर भए । परराष्ट्र मन्त्रालयका अनुसार भैंसीको तयारी मासु निर्यातसम्बन्धी प्रोटोकलमा हस्ताक्षर भएको छ । यो हस्ताक्षरपछि नेपालबाट चीनमा मासु निर्यात हुने बाटो खुलेको छ । भैंसीको मासु निर्यात गर्नु राम्रो भए पनि प्रधानमन्त्री ओली यसैका लागि मात्र चीन गएको हो त ? भन्ने तर्क सुरु भएको छ । प्रचण्ड भारत गएका बेला भारतले नेपाललाई १५ वटा मुर्रा जातको भैंसी उपलब्ध गराएको थियो । उनी २०८० को १७ जेठ देखि २० जेठसम्म भारतको भ्रमणमा गएका थिए । प्रधानमन्त्रीका रुपमा प्रचण्ड भारत भ्रमणमा रहेका बेला त्यहाँको सरकारसँग भएको सम्झौताअनुसार ती भैंसी र राँगा उपलब्ध गराइएको थियो । त्यसअघि तत्कालीन कृषि तथा पशुपन्छी विकास मन्त्री महेन्द्रराय यादव दिल्ली गएर त्यहाँको कृषि मन्त्रालयसमक्ष भैंसी र रागो उपलब्ध गराउन प्रस्ताव गरेका थिए । सोही प्रस्तावअनुसार प्रधानमन्त्री प्रचण्डको भ्रमणमा सहमति भएको थियो । तर, उनी नेपाल फर्किए लगत्तै विपक्षी दलका नेता ओलीले भारतबाट भैंसी चढेर आएको प्रतिक्रिया मात्र दिएनन्, संसदमा यही विषयमा पट्यार लाग्दो भाषण पनि गरे । रास्वपाले पनि प्रधानमन्त्रीले भैंसी चढेर आएको बताएको थियो । प्रतिनिधिसभामा भैंसी चढेर आएको भन्ने शब्द नै हटाउनुपर्यो । तर उक्त शब्द हटाउन निर्देशन दिएकामा एमाले र रास्वपाका सांसदहरूले विरोध जनाए थिए ।

अहिलेका प्रधानमन्त्री ओलीको चीन भ्रमणका क्रममा पनि यस्तै विषयमा मात्र सम्झौता भएको देखिन्छ । नेपाल-चीन व्यापार अभिवृद्धि गर्ने समझदारीपत्रमा भैंसीको मासु अग्रपङ्क्तिमा छ । यस बाहेक २०७२ सालको भूकम्पमा भत्किएको वसन्तपुरको नौ तल्लो दरबारको पुनर्संरचना, टोखा-छहरे सुरुङमार्ग निर्माणसम्बन्धी समझदारी पत्रमा हस्ताक्षर गरी पत्र आदानप्रदान गरिएको छ । तर, नेपालबाट चीनसँग सहमति गर्ने भनेर लगिएका बीआरआई र पोखरा विमानस्थलको ऋणलाई अनुदानमा बदल्ने भन्ने कुरामा सहमति भएको देखिएको छैन ।

बेइजिङस्थित 'ग्रेट हल अफ द पिपल'मा प्रेसलाई दिएको जानकारीको विवरणमा बीआरआई भन्ने शब्दै देखिँदैन । सत्ता साझेदार दल नेपाली कांग्रेस र नेकपा एमालेबीच निकै रस्साकस्सी पछि बनेको फ्रेमवर्कमा सहमति हुने भनिएको थियो । प्रधानमन्त्री ओली आफैले पोखरा विमानस्थलबारे ठूलो उपलब्धि हुने भनेका थिए । त्यो उपलब्धि भनेको पोखरा विमानस्थलमा भएको चिनियाँ ऋणलाई अनुदानमा परिणत गर्न चीनलाई सहमति गराएर समझदारी गर्ने थियो । यी विषय समझदारीमा छैनन् ।

प्रधानमन्त्री ओलीले यसपछि चिनियाँ राष्ट्रपति सी जिनपिङसँग पनि भेटवार्ता गरिसकेका छन् । चीनको औपचारिक भ्रमणमा रहेका प्रधानमन्त्री ओलीले सम्झौतामा हस्ताक्षर पछि सीसँग भेटवार्ता गरेका हुन् । ऋणलाई अनुदानमा बदल्ने काठमाडौंका कुरा चीन पुगेपछि छुटेका छन् । बीआरआई परियोजनाबारे कुनै चर्चा नहुँदा चीनको विश्वव्यापी स्तरको महत्वाकांक्षी कदमप्रति नेपाललाई चासो नदिएको देखिएको छ । अब बीआरआईमा नेपाल कसरी अघि बढ्छ भन्ने पनि अन्योल बढेको छ ।

प्रधानमन्त्री ओलीसँग भेटवार्ता गर्नु अघिल्लो दिन चिनियाँ राष्ट्रपति सीले सोमबार बेल्ट एण्ड रोड इनिसिएटिभ (बीआरआई) अन्तर्गत उच्च गुणस्तरीय सहयोगलाई व्यापक रूपमा अगाडि बढाउने कुरामा जोड दिएका थिए । सीले बेल्ट एण्ड रोड निर्माण कार्यसम्बन्धी चौथो गोष्ठीलाई सम्बोधन गर्दै उक्त भनाइ राखेका थिए । बेल्ट एण्ड रोड सहकार्यको उज्यालो भविष्य निर्माण गर्न रणनीतिक विश्वासलाई सुदृढ गर्न, रणनीतिक फोकस कायम राख्ने र जिम्मेवारीको भावनाका साथ साहसका साथ काम गर्न आवश्यक रहेको सीको भनाइ थियो । तर, नेपालसँग समझदारी गर्दा यो विषय नै नउठेको चर्चा छ ।

मुलभूत विषयमा देखिए जस्तै थप उपलब्धि नभएको हो भने प्रधानमन्त्री ओलीको चीन भ्रमण पनि भैंसीमै सीमित हुने देखिएको छ । उनी नेपाल फर्किएपछि भैंसीको मासु बेच्न चीन गएको भन्ने आरोप प्रचण्ड बाटै सुरु हुनेछ । उनलाई भारतीय भैंसीको विषयमा ओलीले उठाएका प्रश्नको जवाफ दिनु पनि छ । अप्ठेरो परिस्थितिमा चीन गएका ओलीका अन्य उपलब्धि भने फर्किएपछि पुष्टि हुँदै जालान । अहिलेलाई भने चीनसँग भएका समझदारीबाट ठूलो अपेक्षा गर्न सक्ने अवस्था देखिएको छैन ।

# सिप, रोजगार र उद्यम तर्फ लैजान अपांगताको सुझाव

खड्क सुनार, मुगु । हिमाली जिल्ला मुगुमा पनि अपाङ्गता भएका व्यक्तिहरूको ३३ औं अन्तर्राष्ट्रिय दिवस मंगलबार विभिन्न कार्यक्रम गरी मनाइएको छ । 'समावेशी तथा दिगो भविष्यको पूर्वाधार, अपाङ्गता भएका व्यक्तिको प्रवल नेतृत्व यसको आधार' भन्ने मूल नाराका साथ मनाइएको कार्यक्रमको अवसरमा जिल्ला समन्वय समिति मुगुबाट र्याली निकालिएको थियो भने अदालत चोक पुगेर पुन समन्वय समितिको हलमा कोणसभामा परिणत भएको थियो । सन् १९९२ देखि विश्वभर यो दिवस मनाउन थालिएको हो । यसै सन्र्दभमा मुगुमा पनि मनाईएको हो । कार्यक्रममा कविता प्रतियोगिता, रेडियो बहस जस्ता कार्यक्रम गरी मनाईएको छ । दिवसमा बोल्दै डार्डो नेपाल मुगुका अध्यक्ष रमेश रावलका अनुसार संघ, प्रदेश र स्थानीय सरकारबाट निर्माण हुने भवनहरु निर्माण गर्दा अपांगमैत्री बनाएजस्तो देखिए पनि पूर्ण नभएको बताए । संरचना बनाउँदा सबै कोठामा अपांगता भएका ब्यक्ति जान सहज हुने गरी बनाउनुपर्ने बताउँछन् । शिक्षा सबैको लागि भन्ने सरकारी अभियान छ। तर अपांगता भएका व्यक्तिलाई सहजै विद्यालय जाने अवस्था छैन । विद्यालय भवन, शौचालय, कक्षाकोठा पनि अपांगमैत्री बनाउनुपर्नेमा जोड दिए । सडक, पैदलमार्ग पनि अपांगमैत्री भए झनै राम्रो हुने उनीहरूको भनाइ छ । छायाँनाथ रारा नगरपालिकाले गरेको अपांग निति, कार्यविधिहरु छिट्टै पारित गर्न सुझाव दिए । यस्तै कर्णाली प्रदेश सभा सदस्य माननिय जित बहादुर मल्लका अनुसार आगामी बर्षहरुमा अपांगता भएका ब्यक्तिहरुलाई सिप सिक्न, उद्यम बन्न र रोजगारी तर्फ अग्रसर गराउन प्रदेश सरकारले बिशेष पिछडिएको क्षेत्र अन्तर्गत रहेर यस्ता कार्यक्रम सञ्चालन गर्ने बताए । यता छायाँनाथ रारा नगरपालिकाका नगर उपप्रमुख ऐश्वर्या मल्लका अनुसार नेपाल सरकारले प्रदान गर्दे आईरहेका हक अधिकार, सेवा सुविधाबाट अपांगता भएका ब्यक्तिलाई कुनै पनि तवरबाट बञ्चित नगराउने बताईन । उनले भनिन राज्यले उनीहरुलाई दिएको सेवा दिनमा स्थानीय सरकार कटिबद्ध रुपमा लागि रहेको जानकारी गराईन । नगरपालिकाले गरेका निति, कार्यविधिहरु छिट्टै पारित गरी कार्यान्वयनमा ल्याईने र अपांग परिचयपत्र सामाजिक सुरक्षा भत्ता जस्ता सेवाबाट बर्गीकरण अनुसार उपलब्ध गराईने पनि जानकारी गराईन । दिवसकै अवसरमा अपांगता भएका ब्यक्तिहरुको लागि शिक्षामा समावेशिताको अवस्था भन्ने शिर्षकमा कविता प्रतियोगिता गरिएको थियो । जसमा नेपाल राष्ट्रिय मिन मावि भारेकोटकी विनिता मल्ल प्रथम दोश्रोमा महाकाली मावि श्रीनगरका सन्तोषि भक्ति रहेकी छन त्यस्तै प्रकाश मावि लुमका अटलदेवी रावल तेश्रो स्थानमा रहेको छ । उनीहरुलाई क्रमश झोला, शैक्षिक सामग्री र प्रशंसा पत्रसहित पुरस्कार बितरण गरिएको थियो । अन्य सहभागीहरुलाई पनि प्रशंशा पत्र बितरण गरिएको थियो । जम्मा ६ बिद्यार्थीले सहभागिता जनाएका थिए ।

# युद्ध विरामपछि लेबनानमा नौ जनाको मृत्यु

एजेन्सी । इजरायल र हिलबुल्लाहबीच युद्ध विराम भए पनि सीमा क्षेत्रका केही स्थानमा भङ्ग भएको जनाइएको छ । इजरायलले सीमामा आफ्नो सुरक्षाका लागि युद्ध गर्न बाध्य भएको जनाएको हो । यसरी फाट्टफुट्ट भङ्ग भए पनि इजरायल र हिजबुल्लाह दुवैले मध्यस्थता गरेको अमेरिकासँग आफूहरू युद्ध विरामको पक्षमा अडिग रहेको जनाएको छ ।

इजरायलको आक्रमणका कारण सीमामा ११ जनाको ज्यान गएको थियो । यसले युद्ध विराम लागु हुने विषयमा अमेरिकाले शङ्का उत्पन्न गरेपछि दुवै पक्षले सो प्रतिबद्धता व्यक्त गरेका हुन् ।

सोमबार इजरायली रणनीतिक मामला मन्त्री रन डरमरले ह्वाइटहाउसमै अमेरिकाका राष्ट्रिय सुरक्षा सल्लाहकार ज्याक सुलेभानसँग भेट गरेका छन् । सो भेटमा उनले इजरायलले लेबनानी अधिकारीसँग भेट गर्दा युद्ध विराम लागु गर्ने विषयमा सकारात्मक भएको समेत बताएका थिए ।

२७ अक्टोबरका दिन यी दुई पक्ष बिच युद्ध विरामको घोषणा भए पनि सोमबार भएको सो आक्रमण भन्दा अघि हिजबुल्लाहले पनि आक्रमण गरेको दाबी इजरायलको छ । इजरायलले हिलबुल्लाहको आक्रमणपछि केही भौतिक संरचना र हतियार भएको स्थानमा लक्षित गर्दै आक्रमण भएको जनाएको हो ।

इजरायलको गाजामा अहिलेको भूमिकामा भने अमेरिकामा चासो जनाइएको छ । अमेरिकी सिनेटर बनी सान्डर्सले गाजामा आप्रवासी सफाइ अभियान चलाएर इजरायलले युद्ध अपराधलाई प्रेरित गरेको आरोप सान्डर्सको छ । दुई पटकका राष्ट्रपति पदका दाबेदार समेत रहेका ८२ वर्षीय उनले आतङ्कवाद निर्मूल गर्ने नाममा सर्वसाधारणको सफाइ गर्नु गलत भएको कुरा सामाजिक सञ्जालमा उल्लेख गरेका छन् ।

# दक्षिण कोरियामा सैन्य शासन घोषणा

एजेन्सी । दक्षिण कोरियाका राष्ट्रपति युन सुक येओलले मङ्गलबार आपतकालीन सैन्य कानून (मार्सल ल) घोषणा गरेका छन् । उनले बजेट विधेयकमा संसदीय सङ्घर्षका बीच 'साम्यवादी शक्तिहरू'बाट देशको रक्षा गर्न यो कदम आवश्यक रहेको बताएका छन् ।

"उत्तर कोरियाका साम्यवादी शक्तिद्वारा निम्त्याइएका खतराबाट उदार दक्षिण कोरियालाई संरक्षण गर्न र विरोधी राज्य तत्वहरूलाई उन्मूलन गर्न... म यसैले आपतकालीन सैन्य कानून घोषणा गर्दछु", युनले राष्ट्रलाई प्रत्यक्ष टेलिभिजन सम्बोधनमा भने, "जनताको जीविकोपार्जनलाई कुनै ध्यान नदिई विपक्षी पार्टीले महाभियोग, विशेष अनुसन्धान र आफ्नो नेतालाई न्यायबाट जोगाउनका लागि मात्र शासनलाई कमजोर बनाएको छ ।"

पिपुल पावर पार्टी र मुख्य विपक्षी डेमोक्रेटिक पार्टीले अर्को वर्षको बजेट विधेयकलाई लिएर विवाद जारी राख्दै गर्दा राष्ट्रपति युनको यो आश्चर्यजनक कदम आएको हो । विपक्षी सांसदहरूले गत हप्ता संसदीय समितिमार्फत उल्लेखनीय रूपमा घटाएको बजेट योजनालाई अनुमोदन गरेका थिए ।

"हाम्रो राष्ट्रिय सभा अपराधीहरूका लागि आश्रयस्थल बनेको छ, न्यायिक र प्रशासनिक प्रणालीलाई पक्षाघात गर्न र हाम्रो उदार लोकतान्त्रिक व्यवस्थालाई उल्टाउन खोज्ने विधायिकी तानाशाहीको अड्डा बनेको छ", युनले भने ।

उनले विपक्षी सांसदहरूमाथि देशलाई लागुऔषधको शरणस्थल र सार्वजनिक सुरक्षा अराजकताको अवस्थामा परिणत गर्नका लागि लागुऔषध अपराधहरू विरुद्ध लड्ने र सार्वजनिक सुरक्षा कायम राख्ने जस्ता राष्ट्रको मुख्य कार्यहरूका लागि आवश्यक सबै प्रमुख बजेटहरू कटौती गरेको आरोप लगाए ।

युनले ३०० सदस्यीय संसद्मा बहुमत राख्ने विपक्षीलाई 'शासन उखेल्न चाहने विरोधी राज्य शक्तिहरू' भन्दै आफ्नो निर्णयलाई ' अपरिहार्य' भएको बताए । "म सकेसम्म चाँडो राज्यविरोधी शक्तिहरूलाई हटाएर देशलाई सामान्य अवस्थामा फर्काउनेछु", उनले

# फोनको क्यामेरा सफा गर्दा यी कुरामा ध्यान दिनुहोस् !

एजेन्सी । आजकल स्मार्टफोन अब कल वा सन्देशहरू पठाउने र प्राप्त गर्ने माध्यम मात्र रहेन । यो हाम्रो सम्झनाहरू सुरक्षित गर्न र फोटो खिच्न पनि प्रयोग गरिन्छ । तर, स्पष्ट र उत्कृष्ट तस्बिरहरू लिनको लागि, फोनको क्यामेराको लेन्स सफा हुनु अति आवश्यक छ । यदि यो गलत तरिकाले सफा गरियो भने, क्यामेरा बिग्रन सक्छ वा यसको गुणस्तर प्रभावित हुन सक्छ ।

फोनको क्यामेराको लेन्स निकै संवेदनशील हुन्छ । यसलाई सफा गर्न सधैं माइक्रोफाइबर कपडा प्रयोग गर्नुहोस् । यसले लेन्स सफा मात्र गर्दैन तर स्क्र्याचबाट पनि बचाउँछ । कुनै नराम्रो कपडा वा टिस्यु प्रयोग नगर्नुहोस्, किनकि यसले लेन्स कोरिन सक्छ ।

सफा गर्दा, लेन्स बिस्तारै सफा गर्नुहोस् । धेरै दबाबले गर्दा लेन्स भाँच्न वा यसको कोटिंग बिगार्न सक्छ । धेरै मानिसहरूले क्यामेराको लेन्स सफा गर्न सामान्य पानी वा कुनै पनि प्रकारको तरल पदार्थ प्रयोग गर्छन् । यो लेन्सको लागि हानिकारक हुन सक्छ । यदि तपाइँ तरल क्लीनर प्रयोग गर्न चाहनुहुन्छ भने, केवल इलेक्ट्रोनिक उपकरण क्लीनर वा लेन्स क्लीनर प्रयोग गर्नुहोस् ।

धेरै पटक हामी अनजानमा आफ्नो औंलाले लेन्स छुन्छौं । यसो गर्दा, लेन्समा चिल्लोपना र धुलो जम्मा हुन सक्छ, जसले फोटोको गुणस्तर बिगार्छ । यदि लेन्समा धुलो जमेको छ भने, यसलाई सफा गर्न एयर ब्लोअर प्रयोग गर्नुहोस् । यसलाई श्वासले सफा गर्ने प्रयास नगर्नुहोस्, किनकि यसले लेन्समा ओसिलो हुन सक्छ । तपाईंको फोनको क्यामेरा सफा गर्दा यी सावधानीहरू पालना गर्नुहोस्, ताकि तपाईंको क्यामेरा लामो समयसम्म सुरक्षित र प्रभावकारी रहोस् । राम्रो तस्बिर खिच्नको लागि क्यामेरा सफा र उचित हुनु धेरै महत्त्वपूर्ण छ ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### असान्दर्भिक विषयमा बहस हुन सक्ने वातावरण सिर्जना

प्रधानमन्त्री खड्गप्रसाद ओली नेपाली प्रतिनिधि मण्डलको नेतृत्व गर्दै चीनको ४ दिने औपचारिक भ्रमणमा छन् । यसपटक प्रधानमन्त्री भएपछि यो उनको पहिलो औपचारिक विदेश भ्रमण हो । चीन भ्रमणको मिति आधिकारिकरूपमा सार्वजनिक नहुँदै प्रधानमन्त्री ओलीको भ्रमणलाई विवादमा तान्ने प्रयास गरिएको थियो । मूलतः प्रमुख विपक्षी नेता पुष्पकमल कमल दाहालले ओलीले भारतभन्दा पहिले चीन भ्रमण गरेर 'चाइना कार्ड' खेलेको आरोप लगाएपछि विवाद चर्केको हो ।

भ्रमणलाई थप विवादमा ल्याउने काम भने प्रधानमन्त्री ओलीको सत्ता साझेदार दल नेपाली कांग्रेसका नेताहरूको ' बीआरआईमा ऋण' लिँदै नलिने घोषणाबाट भयो । फलस्वरूप प्रधानमन्त्री ओली महत्त्वाकांक्षी 'बेल्ट एन्ड रोड इनिसियटिभ' कार्यान्वयनसम्बन्धी सम्झौता होस् भन्ने चिनियाँ चाहना र सत्ता साझेदारको आनाकानीको चेपुवामा परे ।

तर चीन पुगेका प्रधानमन्त्रीबाट बीआरआईअन्तर्गत कुनै प्रकारको सम्झौता हुन सकेन । अर्थात नेपाललाई चीनले कुनै महत्व नदिएको आंकलन गरिएको छ । किनकी चिनीया पक्षले नेपालको एजेण्डामा नै नपरेको केही ९ बुँदे सहमतीमा हस्ताक्षर गरेको छ । विशेषगरी अमेरिकी अनुदान सहयोग मिलेनियम च्यालेन्ज कर्पोरेसन कार्यान्वयनका क्रममा चर्काइएको अनावश्यक र अनुचित विवादले पछिल्ला वैदेशिक सहयोग कार्यान्वयनमा किचलो खडा भएको थियो । यही कारण नै हुन सक्छ चिनीया पक्षले बिआरआई सम्बन्धमा नेपाललाई अलग राख्ने निर्णय गरेको । यसबाट नेपालको आर्थिक पक्षमा यसले ठूलै प्रभाव पार्ने देखिन्छ । साथै नेपालको सन्दर्भमा भारतीय पक्षलाई नेपालमाथि चिनीया रबैयाले राहतको पनि महशुश गराएको हुन सक्छ । यसमा विपक्षी दल नेपाली कांग्रेसको चीनबाट कुनै पनि प्रकारको सहयोग नलिने र सहयोग लिनै परे भारतीय र अमेरिकी सहयोग लिने नीति सफल भएको देखिन्छ । चीनबाट मात्र अनुदान मात्र अडान सफल भएको देखिन्छ । यस अर्थमा प्रधानमन्त्री ओलीको चीन भ्रमण पूर्णतया असफल रहेको र पुन एक पटक नेपाली राजनीतिमा मुर्रा भैसीको बारे बहस हुने देखिएको छ ।

विगतमा नेकपा माओवादी केन्द्रका अध्यक्ष प्रचण्ड प्रधानमन्त्री बने लगतै भारतको भ्रमणको क्रममा भारतीय पक्षले नेपाललाई मुर्रा जातका भैंसी अनुदानमा उपलब्ध गराएको थियो । यसै विषयलाई लिएर तत्कालिन विपक्षी दलका नेता तथा वर्तमान प्रधानमन्त्री आलीले भैंसी चढेर नेपाल फर्किएको टिप्पणी गर्दै नेपालको राजनीतिमा विवाद उत्पन्न गराएको थियो ।

बर्तमान प्रम ओलीको भ्रमणको उपलब्धि पनि भैंसीमै सीमित भएको र यसले नेपाली राजनीतिमा पुनः एक पटक असान्दर्भिक विषयमा बहस हुने देखिएको छ । यसै विषयलाई लिएर नेकपा माओवादी केन्द्र सम्वद्ध पक्षले प्रमको आलोचना सामाजिक सञ्जाल मार्फत गरिसकेको छ । जुन नेपाली राजर्नीतिमा अप्रासंगिक विषय हो ।

प्रधानमन्त्री ओलीको चीन भ्रमणबाट नेपालले लिन सक्ने आर्थिक लाभबाट एकपटक पुनः चुकेको छ । नेपालमा चीनलाई हेर्ने दृष्टिकोण भारतीय र अमेरिकी स्वार्थसँग मिल्न गएको कारण पनि नेपाललाई चीनले प्राथमिकतामा नराखेको राजनीतिक विश्लेषकहरुको बुझाई रहेको छ । किनकी नेपालले देशको आर्थिक विकासको लागि विभिन्न पश्चिमी राष्ट्र, भारतीय पक्ष, बिश्व बैंक र एशियाली विकास बैंकबाट ऋणहरु लिने गरेको तर पश्चिमा राष्ट्रकै कारण नेपालले चीनबाट आर्थिक सहयोग लिन हिच्किाउनुले पनि नेपालको परराष्ट्र नीति तथस्त नुहुनुले हो ।

नेपालले अबको दिनमा सबै राष्ट्रसँग पञ्चशीलको आधारमा परराष्ट्र नीति कायम गर्नु आवश्यक छ । हुनत नेपालको परराष्ट्र नीति विगतमा पनि पञ्चशीलको आधारमा रहने नीति लिईदै आएकोमा बर्तमान समयमा नेपालले सो नीतिमा अडिग रहन नसकेको कारण छिमेकी मुलुकबाट नेपालले प्राप्त गर्न सक्ने आर्थिक लगायतका लाभबाट बञ्चित हुने गरेको छ । यस विषयमा बर्तमान राजनीतिक दलका नेताहरु, विज्ञका साथै आम नागरिकको पक्षमा हित हुने विषयमा निर्णय लिन नेतृत्व वर्ग हिच्किचाउनु हुँदैन ।

# आखिर नेपालीहरू विदेश नै किन जान्छन् ?

● झनक प्रसाद धमला

यति धेरै भौगोलिक विविधता र प्राकृतिक सम्पदाको हिसाबले लोभलाग्दो मुलुकबाट दिनप्रतिदिन हजारौँको संख्यामा नेपालीहरु विदेशिनु आजको विडम्बना हो । यसरी नेपाली युवायुवतीहरु विदेश पलायन हुने प्रवृत्तिले नेपालको भविष्य कता जाँदैछ त ? भन्ने गम्भीर खालको प्रश्न उब्जिएको छ ।

बाध्यतामा सुरु भएको नेपालीको वैदेशिक यात्रा आज कता-कता रहर र प्रतिष्ठाको रुपमा अगाडि बढिरहेको देखिन्छ । जसको उदाहरणको लागि अधिकृत तहमा कार्यरत सरकारी स्थायी कर्मचारी, सेना प्रहरीका जवानहरु तथा विभिन्न पदमा कार्यरत शिक्षकहरु समेत जागिर छोडेर विदेश जाने गरेको कुरा राष्ट्रिय समाचारमा आउन थालेका छन् ।

यसरी विदेशिनुको मुख्य कारण ठोस गरिहाल्न सकिने अवस्था चाहिँ छैन । कोही नेपालको राजनीतिक अस्थिरता प्रमुख कारण हो भन्ने गर्दछन् भने कोही रोजगारको अभावले भन्ने गर्दछन् । तर, स्वदेश प्रतिको वितृष्णा, आर्थिक अभाव र प्रतिष्ठा अहिलेको विदेश यात्राका प्रमुख कारण देखिन्छन् ।

अथाह प्राकृतिक सम्पदाको धनी मुलुकमा सरकारले दीर्घकालीन योजना बनाएर भ्रष्टाचारमा शून्य सहनशीलताको नीति लिँदै अगाडि बढ्ने हो भने नेपालीहरुले नेपाल छोड्नै पर्ने बाध्यता भने रहँदैनथ्यो ।

नेपालको तीन खम्बे अर्थ नीति कागजमा मात्र सीमित रहेको बुझिन्छ । नत्र आम नागरिकहरू तथा विदेशि लगानीकर्ताहरुको विश्वास जितेर प्राकृतिक स्रोत साधनहरुको भरपुर उपयोग गर्ने मात्र हो भने पनि नेपालको जनशक्तिले समेत नभ्याउने गरि रोजगारीको सिर्जना हुने पक्का छ ।

यहाँ हजारौं निर्झर खोला तथा झरनाहरु अनवरत रूपमा बगिरहेका छन् । जग्गा जमिन सिँचाइको समस्याले मनसुनको पर्खामा हुन्छन्, नागरिकहरु डोकोमा गाग्री बोकेर हिँडिरहेको देख्न सकिन्छ । अनि पर्याप्त मात्रामा विद्युत उपयोग गर्ने अवस्था अझै छैन ।

यहाँको जल, जडीबुटी, जंगल र जमिनको मात्र बुद्धिमत्ता ढंगले उपयोग गर्ने हो भने नेपालले निर्यातमा छलाङ् मार्न सफल हुने निश्चित छ । यसको अलावा यहाँ पर्यटन व्यवसायमा विश्वजगतमा बाजी नै मार्ने सम्भावना बोकेको प्रकृतिक भूगोल छ । यही नै रोजगारीको असीमित स्रोत बन्न सक्छ ।

यसका अलावा विज्ञान, प्रविधि र सूचना सञ्चारको आजको आधुनिक युगमा नागरिकहरु आफैँले उत्पादन र आविष्कारका क्षेत्रमा फड्को मार्दै जान्छन् । यदि सरकारले इमान्दारीपूर्वक निष्पक्ष भएर सहजीकरण गरिदिने हो भने नेपाली आफैँले नेपाललाई स्वर्ग बनाउन सक्छन् ।

तर,अहिले नेपालमा भइरहेको राजनीतिक अस्थिरता नै देशको लागि घातक बनिरहेको छ । नेपालमा विकासका कुरा, दीर्घकालीन योजनाका कुरा, उत्पादनका कुरा, आविष्कारका कुरा लगायतका भविष्य उज्ज्वल बनाउने विषयमा कहिल्यै बहस भएको देख्न र सुन्न पाइँदैन ।

बरु दिनहुँजसो सत्ताका लगि आरोपप्रत्यारोप मात्र छरपष्ट भइरहन्छन् । यस्ता राज्य सडाउने समाचारहरु सुन्दासुन्दा आजित भएका नागरिकहरु कहिले देश छोडौं भन्ने अवस्थामा रहेका देखिन्छन् ।

सानो तिनो काम पनि नेताको घर आँगनमा गएर चाकडी नगरी बन्दैनन् । नीतिभन्दा नेता ठूलो भनेर पुष्टि गरिरहेका छन् । जनप्रतिनिधिहरु आफूअनुकूल नीति निर्माणमा अभ्यस्त छन् । आम नागरिकको समस्यामा कसैको पनि अन्तरआत्मादेखि चासो, चिन्ता र चिन्तन देखिँदैन ।

राजनीतिक तथा आर्थिक चलखेलमा मात्र जागिरमा नियुक्ति र सरुवा हुने गर्छन् । नागरिकहरुका जीवनसँग जोडिएका अति संवेदनशील समस्याहरू पनि कसैले ध्यान दिएर सुन्नेवाला देखिँदैन ।

राजनीतिक शक्तिका आधारमा विकास योजना पार्ने तथा ठेक्कापट्टाका कामहरु हुने गरेका छन् । आवश्यकताका आधारमा विकासका योजनाहरू बन्दैनन् । शक्तिका आधारमा मात्र विकासका योजनाहरु बन्ने, शक्तिकै आधारमा ठेक्कापट्टाको सुनिश्चित हुने र शक्तिकै प्रयोग गरेर चरम भ्रष्टाचार गरी योजनाहरु सम्पन्न हुने गरेका छन् ।

सानातिना योजनाहरुमा त नागरिकले बोल्न सक्दैनन् भने ठूला ठूला योजनामा कति भ्रष्टाचार गरिन्छ यो कसैलाई थाहा हुने कुरै भएन । यसरी नागरिकहरुको कर अपचलन गरेर तिनै नागरिकहरुलाई वेवस्ता गर्ने प्रवृत्ति हट्नुको सट्टा झन् मौलाउँदै गएको देखिन्छ ।

राजनीतिक संरक्षणमा अपराधहरु हुने गर्दछन् । सर्वसाधारण नागरिकहरु अति निरीह बनिरहेको देखिन्छ । राजनीतिक उच्च तहका मानिनेहरुले कानुन हातमा दिएर सर्वसाधारणहरु माथि धज्जी उडाएको देखिन्छ ।

नागरिकहरुको आधारभूत आवश्यकताहरु समेत सम्बोधन भएका छैनन् । विकास गर्यौं भनेर सत्तासिन दलहरु सडकमा मान्छे जम्मा गरेर भाषण गर्दछन् । नागरिकहरुले महसुस गर्ने गरी विकास निर्माणका काम हुँदैनन् ।

राजनीतिकर्मी र राजनीतिक संरक्षणकर्ताहरुको मात्रै राज्य हो कि जस्तो आम नागरिकहरुमा लाग्ने वर्तमान अवस्थामा आम नागरिकहरु आफ्नो देशप्रति चरम वितृष्णाको अवस्थामा रहेका छन् । यिनै कारणहरु नागरिक विदेशिने कारक तत्वहरु हुन् ।

नेपालको वर्तमान संविधानले आकर्षक मौलिक हकको व्यवस्था गरेको छ । तर, ती मौलिक हक कानुनी तथा व्यवहारिक रुपमा कार्यान्वायन गर्नुपर्छ भन्ने कुनै दलमा पनि प्रतिबद्धता देखिएन । वर्तमान समयमा क्रियाशील राजनीतिकदलहरु कुनै न कुनै वेला विभिन्न हैसियतमा सरकारमा सहभागी भएकै छन् । तर, कसैले पनि नागरिकलाई प्राथमिकतामा राखेको देखिँदैन ।

स्वास्थ्य उपचारको पिरलो आम नागरिकहरुको मुख्य समस्या हो । नागरिकहरु अति सामान्य औषधीसमेत उपभोग गर्नबाट बञ्चित छन् ।

शिक्षा न त निःशुल्क नै छ, न त व्यावहारिक र व्यावसायिक नै छ । न त देशैभरि एकै रुप र स्वरूपको नै छ । कथित धनी वर्ग भनिनेहरुले आफ्ना नानीबाबुहरु अंग्रेजीमा पढाउँछन् अनि गरिब ठानिएकाहरु सरकारी विद्यालयमा नेपाली भाषामा पढाउँछन् । यसलाई उनीहरु आफ्नो असमर्थताको बाध्यता ठान्छन् ।

मौलिक हकमा रोजगारीको व्यवस्था गर्ने कुरा निक्कै मखख पार्नेगरी राखिएको छ । तर, कुनै एउटा सरकारी पदमा अस्थायी मात्र भए पनि आफ्नो योग्यता निष्पक्ष रूपमा प्रदर्शन गर्न पनि नागरिकहरु वञ्चित छन् । देखावटी परीक्षा गरेजस्तो गरेर आफ्नो दलको झण्डा बोकेको आधारमा अर्थात् आर्थिक चलखेलमार्फत नियुक्ति गरिन्छन् । जसले नागरिकहरुले आफ्नो योग्यताको अपमानको रूपमा लिने गरेका छन् ।

सरुवा पनि निश्चित व्यक्तिको मुटठी भरमा हुन्छन् । न कुनै विधि, न कुनै कार्यविधिका आधारमा गरिन्छ । यसरी आम सर्वसाधारणलाई जवर्जस्त राजनीतिक क्रियाकलापमा सहभागी गराउने कार्यले पनि स्वदेशप्रति नैराश्यता छाएको अवस्था छ ।

यी सवालका अलावा अहिले नेपालीहरुमा देखासिखी गर्ने र अर्काको डाह गर्ने प्रवृत्ति बढेसँगै हाल जनशक्ति पलायन दिनानुदिन बढ्दै गइरहेको छ । छिट्टै धनी बन्ने, अरूभन्दा धेरै पैसा कमाउने सोचलगायत बुझाइका कारण पनि वर्तमान परिवेशको लागि आगोमा घ्यु थपेझैँ हुन गएको छ ।

समग्रमा भन्नुपर्दा मानिस विवेकशील प्राणी भएकोले जीवनको रक्षा, स्वतन्त्रता र जीवनका खुसियालीलाई अन्तिम इच्छाको रूपमा लिएको हुन्छ । तसर्थ समान व्यवहारको सुनिश्चितता सहित नागरिकका आधारभूत खुसीको प्रयास राज्यले गर्ने दृढता देखाउन सक्नुपर्छ ।

आजको विश्वव्यापीकरणको युगमा गरिब मुलुकबाट विदेशिने कार्य रोक्नु आजको मुख्य चुनौती नै बनेको छ। अतः स्वदेशमा अवसर हरुको खोजी, सम्भावनाहरुको खोजी, नागरिकका हक अधिकारको पक्षपातरहित ढंगले प्राप्ति तथा कानुनी राज्यको अवधारणा नै अन्तिम विकल्प हो। नागरिकहरूलाई सम्मानित भएर बाँच्न समान व्यवहार तथा योग्यता प्रणालीको पूर्ण कार्यान्वयन अनिवार्य शर्त हो।

यसका अलावा प्राकृतिक स्रोत साधनको भरपुर उपयोग गर्ने नीतिमार्फत जनशक्तिको यथोचित उपयोग नै नागरिक पलायन रोक्ने प्रभावकारी विधि हो । थाहाखबर

## जंगली.

गरी बनाइएको हो । कतिपय भूमिमा अहिले निकुञ्ज क्षेत्रमा पर्ने नारायणी र राप्ती नदी बगीरहेको छ भने कतिपय आदिवासी भूमि निकुञ्ज भित्र गाभिएका छन् । नवलपुरस्थित मध्यविन्दूका मंगुराम बोटेको भनाइमा २०४० सालमा नारायणीको बाढीले बोटेहरुको भूमि कव्जा गर्‍यो । बोटेको भूमिमा अहिले नारायणी बगिरहेको छ । मंगुराम भन्नु हुन्छ, 'अहिले सेनाले नारायणीको पानी छुन समेत दिदैन ।' यस्तै कथा राप्ती नदीको पनि छ । भरतपुर मटिहानीमा पनि राप्ती नदीले धार फेर्दा बोटे बस्ती सखाप भयो । भरतपुर पटीहानीका हरिचनले भन्नुभयो 'अहिले बोटेको घरखेतमा राप्ती बगीरहेको छ भने राप्ती नदी बग्ने स्थानमा निकुञ्जको शासन छ ।'

'वास्तवमा आदिवासी बोटे, थारुलगायतको भूमि निकुन्ज प्रशासनले उनीहरुको मञ्जुरीबिना कव्जा गरेको हो ।' नेपाल बोटे समाजका अध्यक्ष राजकुमार बोटेको शव्दमा 'यसरी कव्जा गरिएका जमिन फिर्ता पाउने, जमिनको बदला जमिन पाउने, त्यो काबुबाहिरको परिस्थिति परी फिर्ता दिन नसकिएमा त्यसको न्यायोचित क्षतिपूर्ति पाउने उनीहरुको अधिकार हो, तर भूमि फिर्ता पाउन त कता हो कता ? नारायणी नदीमा माछा मार्न पनि बोटेहरुले पाउँदैनन् ।'

स्थानीय राजेन्द्र बोटेले त्यहाँका बोटेलगायतको मानवअधिकार निरन्तर हनन् भइरहेको आरोप लगाउनु भयो । परम्परागत रुपमा जल, जमिन र जंगललाई आफ्नो जीविकोपार्जनको माध्यम बनाएका स्थानीय आदिवासीहरुको मानव अधिकार निकुन्जको बर्तमान व्यबस्थाले हनन् गरेको छ ।

स्थानीय बोटेहरु निकुञ्जका कारण समुदायको सामाजिक गतिविधिमा बन्देज लागेको बताउँछन् । 'बोटेहरुको परम्परागत चरिचन खोसिएको छ । घाँस, दाउरा, सोतर संकलनमा निकुन्जले प्रतिवन्ध लगाउनाले स्थानीय बोटेलगायतको जिविकोपार्जनमा प्रत्यक्ष असर परेकोछ ।' नेपाल बोटे समाजका चितवन अध्यक्ष प्रदीप बोटेले बताउनु भयो 'माछा तथा तथा कन्दमूल लगायतका स्रोतमा प्रतिबन्ध लगाउनाले बोटे समुदायको सामाजिक, साँस्कृतिक अधिकार माथि हस्तक्षेप भएको छ ।'

माछा मार्ने लाइसेन्स नवीकरण भएन

निकुञ्ज ऐन र नियमावली अनुसार मध्यवर्ती क्षेत्रमा बस्ने रैथाने बासिन्दाले स्थानीय स्रोतको उपयोग गर्न सक्ने व्यबस्था भए पनि चितवन राष्टिय निकुञ्जमा त्यो सुविधा उपलव्ध नभएको स्थानीयको भनाइ छ । तर उनीहरुले कुहिएका दाउरा बटुल्न, फलफूल-कन्दमुल खाज्न, सागपात टिप्न, माछा मार्न जाँदा निकुञ्जको चर्को दण्डसजायका भागी बनेको उनीहरुको मूख्य गुनासो छ ।

'पहिला पहिला मध्यवर्ती क्षेत्रमा बस्नेका लागि माछा मार्ने लाइसेन्स दिइन्थ्यो, तर अहिले लाइसेन्स नविकरण गर्न कठिनाइ छ ।' स्थानीय कुमनारायण बोटेले भन्नु भयो -'पुराना पुस्ताको लाइसेन्स नविकरण छैन, नयाँलाई लाइसेन्स दिइदैन ।' नदीजन्य जलचर माछा, घुँगी संकलन गर्द कतिपयको ज्यान पनि लिने गरेको उहाँहरुको टिप्पणी छ । उहाँहरुले विसं.२०७७ साउन १ गते चितवन राप्ती नगरपालिका वडा.नं. २ मा बसोवास गर्ने एकजना चेपाङ घोँगी कीरा खोज्न राप्ती नदीको छेउको खोलामा जादाँ राष्ट्रिय निकुञ्जको सरक्षाकर्मीबाट निर्मम कुटाइ खाएर ज्यान गएको घटनालाई प्रस्तुत गरेका छन् ।

चितवन राष्ट्रिय निकुञ्जको प्राकृतिक श्रोतजल जमिन र जङ्गलमा आश्रित जीवनपद्धतिलाई निषेध गर्नेगरी सरकारले बनाएको वन संरक्षित कानुन र विभिन्न नियम र निर्देशिकाले थप समस्या र चुनौती निम्त्याएको नवलपुरका आदिवासी अभियन्ता राम तामाङको निश्कर्ष छ । आदिवासी जनजातिको अधिकारसम्बन्धी अर्न्तराष्ट्रिय श्रम सङगठन महासन्धी-१६९ मा विकासको वा कुनै पनि भौतिक निर्माणको नाममा आदिवासी जनजातिहरूलाई उनीहरूको पुर्ख्यौली भूमिबाट विस्थापन गर्न नपाइने प्रावधान हुँदा हुँदै सोको पालना हुन नसकेको तामाङको विश्लेषण छ ।

आदिवासी जनजातिहरूलाई आफ्नो पुर्ख्यौली भूमिबाट विस्थापन गर्नैपरे उनीहरूको स्वतन्त्र, पूर्व, सुसूचित सहमति लिएर मात्र विस्थापन गर्नसक्ने व्यबस्था छ । तर यसको कार्यन्वयन नभएका कारण समस्यामा परेको आदिवासी अभियन्ताहरुको मत रहेको छ । इन्डिजियसबाट

त्रिमTIMES
वर्ष १८ अङ्क १८ २०८१ मंसीर १९ गते बुधबार
04 Dec. 2024 Wednesday


# भान्सामा नै छ बालबालिकाको पौष्टिक भोजन

अरुणा उप्रेती

काठमाडौं । अभिभावकहरूले यदि आफ्ना, शिशु र छोराछोरीलाई माया गर्नुहुन्छ भने उनीहरुलाई धेरै नयाँनयाँ लुगा, नयाँ मोबाइल दिनुभन्दा उनीहरुको भोजन कति पौष्टिक छ भन्ने कुरामा बढी ध्यान दिनुपर्छ । साना शिशु र बालबालिकाको स्वास्थ राम्रो पार्न र उनीहरुलाई रोगसँग लड्ने शक्ति दिलाउन बाहिरका प्याकेटका खाना, सिसीमा राखेका महङ्गो खाना, उचाइ र बुद्धि बढाउने भनेर विज्ञापन गरिएका गलत खाना होइन, आफ्नो भान्छामा जे छ त्यसैलाई शिशुको रुचिअनुसार र उसले खानसक्ने गरी बनाएर दिनुपर्छ ।

अहिलेका बालबालिका आमाबुबाले माया गरेर बाहिरका खानेकुरा दिएको देख्दा दुःख लाग्छ । एउटा त यसले बच्चाको स्वाथमा नराम्रो असर पार्छ, अर्कोतिर बच्चाले जीवनभरको लागि घरको खानाभन्दा बाहिरको खाना उत्तम हुन्छ भन्ने सिक्छ । अनि युवावस्था नपुग्दै उच्च रक्तचाप, मधुमेहको शिकार हुन्छ । प्याकेटका खानेकुरालाई राम्रोसँग सुरक्षित राख्न बढी नून र चिनी दुबै हालेको हुन्छ । बच्चाको सानो मृगौलामा त्यसले नराम्रो असर पर्छ ।

जब स्कुल जाने केटाकेटीको खाना बट्टामा बाबुआमाले नै खाजाको रुपमा चाउचाउ, बिस्कुट, कुरमुरे, दुनोट हालेको देख्छु मेरो मन कटक्क काट्छ । कतिलाई त भन्ने गर्छु, "तपाईंले बच्चालाई मन परेको भनेर यस्ता खाना दिनुहुन्छ । तर यसले त बच्चालाइ मन्द विषको काम गर्छ । मिर्गौला, मुटु, आद्रा सबै विस्तारै खराब हुँदै जान्छ ।" यसो भन्दा कतिले 'ए हो र १ हामीलाई थाहा थिएन' भनेर बच्चाको हातबाट खोस्छन् पनि, कतिले चाही पर्ल्लक्क आँखा पल्ट्याउँदै भन्छन्, ' तपाईलाई के चासो, मेरो छोराछोरीलाई म जे मन लाग्छ दिन्छु ।' कतिले चाँही "हो हामीलाई थाहा छ, तर के गर्नु बच्चाले रोएर, मान्दैमान्दैन, अनि दिक्क लागेर दिन्छु" भन्छन् । त्यस्ता बाबुआमालाई मेरो एउटै प्रश्न हुन्छ, "के तपाईको बच्चाले रक्सी र चुरोट खान्छु भनेर लडीबुडी गरे दिनुहुन्छ रु" तुरुन्तै जवाफ आउँछ, "अहँ, दिन्न नि, त्यो त स्वास्थ्यको लागि खराब हुन्छ ।" भन्छन् अनि म भन्छु" हो, त्यसरी नै यस्ता प्याकेटका खानाले तपाईंको बच्चालाई हानि गर्छ । भोलि स्वस्थ्य युवायुवती बन्नुको सट्टा उनीहरु रोगी बन्छन् ।

गाउँ र शहरमा बालबालिका र शिशुको खानेकुरा भनेर महङ्गो बट्टा र प्याकेटमा बेचेको देख्दा प्रायः बाबुआमाले हो त नि त्यस्तै खाना बच्चालाई दिए बच्चा शारीरिक र मानसिक रुपमा स्वस्थ बन्छ भन्ने विचार राख्छन् । कतिले भन्छन् "हाम्रो भान्छामा त शिशुलाई खुवाउनयोग्य वस्तु नै छैन ।" अनि कतिचोटी सञ्चारमाध्यमहरुमा बजारका प्याकेटका खानाको विज्ञापन आउँछ, "बच्चा एक वर्षको भएपछि घरको खानाले पुग्दैन । घरको खानामा प्रोटीन र भिटामिन हुँदैन । त्यसैले प्याकेटका खाना नै खुवाउनुपर्छ ।" विज्ञापनको प्रभावमा परेर यस्ता प्याकेटका खाना बच्चालाई दिनु हुँदैन । यस्ता खाना त गहुँ, चामल, मकैबाट नै बनाइएका हुन्छन्, जुन हाम्रो घरमा हुन्छन् नै । प्याकेटमा राखेपछि यसको मूल्य बीसौं गुना बढ्न जान्छ । फेरि यस्ता प्याकेटमा राखेका अन्न कुहिएका वा म्याद नाघेको हुन्छन् कसलाई थाहा नै हुँदैन । त्यसैले शिशु र बालबालिकालाई आफ्नै भान्छाको खाना दिनपर्छ ।

पास्नीपछि जब शिशुलाई अन्न दिन सुरु गरिन्छ, त्यसपछि थोरै थोरै चामलको पिठोको हलुवा खुवाउन सकिन्छ । शिशुलाई खान दिंदा उसलाई पहिले स्वाद लाग्दैन । शुरुशुरुमा थु थु गर्छ होला, तर विस्तारै धैर्यपूर्वक खुवाउनै जानुपर्छ । शिशुले खाएन भनेर धेरै चिनी हालेर खुवाउँदा एकछिन त शिशुले खान्छ तर चिनीले उसको स्वास्थमा राम्रो प्रभाव पार्दैन । चामलको पिठो, गहुँको पिठो आदिबाट हलुवा, लिटो बनाएर शिशुलाई खुवाउन शुरु गर्न सकिन्छ । गहुँ र चामलका पिठो, सुजी त प्रत्येकको भान्छामा हुन्छ । एक चम्चाबाट खुवाउन शुरु गरेर विस्तारै बढाउन सकिन्छ । शिशुको पेट सानो हुन्छ, त्यसैले एकैपल्ट धेरै खुवाउनु हुँदैन भन्ने हेक्का त राख्नै पर्छ । आलुलाई उसिनेर लिटो जस्तो बनाएर शिशुलाई खान दिने चलन त पुरानै हो । आलु शिशु र बालबालिकाको लागि शक्ति र विभिन्न किसिमका भिटामिन दिने राम्रो भोजन हो । तर आलुलाई बेस्सरी तेलमा तारेर वा फ्रच फ्राई जस्तो गरेर दिनु हुँदैन ।

शिशुलाई रक्तअल्पता नहोस् भनेर ध्यान पुऱ्याउनैपर्छ । भटमासको पिठो, बदामको पिठो अलिकता दूधमा पकाएर दिनाले शिशुको शरीरमा प्रोटिन पुग्छ । गाउँघरको चलनअनुसार फलामको भाँडामा पकाएको खानेकुराले शिशुलाई फाइदा गर्छ । विभिन्न प्रकारका दाल, भुटेर, चामल र मकै पनि भुटेर त्यसको सर्वोत्तम पिठो बनाएर त्यो दूध वा पानीमा पकाएर हलुवा वा मोहनभोग जस्तो गरेर दिन सकिन्छ । शिशुलाई दिनभरिमा पाँच/छ पटक खुवाउँदा शिशुको स्वास्थ राम्रो हुन्छ । खाना खुवाउँदा शिशुलाई गाली गरेर, तर्साएर, पिटेर जबर्जस्ती कोच्याएर खुवाइयो भने त्यसले शिशुको शरीरिक र मानसिक दुवै स्वास्थमा नराम्रो असर गर्दछ । कति जनाले शिशुलाई एक/दुई चोटी खुवाउन कोशिस गर्दा नखाएपछि, "आ, फुर्सद छैन । पछि खाइहाल्छ" भनेर बेवास्ता गरिदिन्छन् । यसरी हरेक दिन शिशुले लामो समय भोको बस्यो भने उसलाई कुपोषण, रक्तअल्पता, विभिन्न खनिज पदार्थको कमी हुनसक्छ । शिशुलाई रक्तअल्पता भयो भने उसको रोगसँग लड्ने शक्ति पनि कम भएर जान्छ र बारम्बार रुखाखोकी लाग्ने, छातीमा सङ्क्रमण हुने हुन्छ । साथै, उनीहरुको नयाँ कुरा सिक्ने क्षमता पनि कमी हुन्छ ।

शिशुहरुलाई आफ्नो शरीरको जति तौल हो, त्यो अनुपातमा तीन-चार गुना बढी प्रोटिन जरुरत पर्छ । उदाहरणको लागि, आठ किलो तौल भएको शिशुको लागि २४-३२ ग्राम प्रोटिन चाहिन्छ । तर यो कुनै औषधि वा क्याप्सुलको माध्यमबाट दिएर हुँदैन, भोजनबाटै नै दिइनुपर्छ । घरमा पाइने दलहन, गहुँ, कोदो, फापरको पिठो उचित तरिकाले पकाएर खान दिंदा शिशुले पोषण प्राप्त गर्छ । यी वस्तुमा भिटामिन, फोलिक एसिड, भिटामिन सी आदि पनि हुन्छन् अर्थात शरीरलाई चाहिने पौस्टिक तत्व सहजै पाइन्छ ।

रक्तअल्पता नहोस् भनेर सफा गरिएको हरियो सागलाई फलामको भाडामा पकाएर त्यसलाई हातले मुछेर अलिकता कागती हालेर खुवाउँदा सागमा रहेको लौहत्व शरीरमा राम्रोसँग शोषण हुन्छ । अहिले प्रेसरकुकरमा साग वा दाल पकाउँदा सफा फलामको डल्नो हालेर पकाउने चलन पनि छ । अमेरिकाबाट निस्किएको 'डाक्टर नभएमा' भन्ने प्रसिद्ध किताबमा प्रेसरकुकर नहुने ठाउँमा एउटा गिलासमा सफा पानीमा फलामको टुक्रा राख्ने र आधा घन्टापछि फलामको टुक्रा झिकेर कागतीको रस राखेर कही बेर छोडिदिनु र केही समय पछि त्यसको पानी प्रयोग गर्दा पनि लौह तत्व शरीरमा प्राप्त हुन्छ भनेर लेखिएको छ ।

शिशुलाई दिने लिटो फलामको भाँडामा पकाउन सकियो भने पनि लौहतत्व प्राप्त हुन्छ । दूध शिशुको लागि राम्रो भोजन हो वा त्यसमा लौह तत्व हुँदैन । यदि दूधलाई फलामको भाँडामा उमालेर शिशुलाई खान दिइयो भने त्यसबाट पनि शिशुलाई लौहतत्व प्राप्त हुन्छ । शिशु एक वर्षको भएपछि अलिकता दाँत आउन थालेपछि जब केही टोक्न खोज्छ उसलाई सानो, टुक्रा गाजर टोक्न दिन सकिन्छ । शिशुलाई गाजर, फर्सी, लौका आदि उसिनेर, मुछेर गिलो बनाएर दिन सकिन्छ । यी सबै तरकारी विभिन्न खनिज तत्वले भरिपूर्ण हुन्छन् र यसको प्रयोगले गर्दा शरीरमा रेशादार पदार्थ पनि पुग्छ । रेशादार पदार्थले शिशु र बालबालिकालाई कब्जियतबाट बचाउँछ ।

कतिपय बाबुआमाले बच्चालाई बाहिरका भिटामिन, क्याल्सियम, प्रोटिन आदि औषधिको रुपमा खान दिनुपर्छ भन्ने विश्वास गर्छन् । अनि बच्चाका लागि भिटामिनका ठूलाठूला बोतल किनेर ल्याउँछन् र बच्चालाई राम्रो स्वास्थ्य दिएका छौं भनेर खुशी हुन्छन् । तर ५० वर्षअघि जब नेपालमा भिटामिनका सिसी पाइँदैनथ्यो, हाम्रा बाबुआमाले त हामीलाई राम्रो स्वास्थ हुर्काएका थिए । यो घरकै खानाबाट सम्भव भएको हो भन्ने कुरा बिर्सन हुँदैन ।

गाउँघरमा अहिले कतिपय आमाले चाउचाउ, बिस्कुट, कुरमुरे आदि अनेकथरिका भिटामिन पाइन्छ भनेर सुनेका हुन्छन् र उनीहरुले छ महिनाको शिशुलाई चाउचाउ पकाएर दिन्छन् । मेरो मन काटिन्छ । यस्तो देखेको बेलामा त अभिभावकलाई भन्छु प्याकेटको कुराले तपाईको बच्चाको स्वास्थ साह्रै नराम्रो पार्छ, नदिनोस् । उनीहरु छक्क पर्छन्, कतिले त मैले झुटो बोलेको ठान्छन् । कुपोषित बालबालिकालाई अस्पतालमा लैजादा प्रायः स्वास्थकर्मी र चिकित्सकले, कुपोषणको ठीक पार्न गोली र भिटामिनका सिसीको भर पर्न हुन्न, भान्छाकै खानेकुरालाई राम्रोसँग बनाएर दिनुपर्छ भनेर त पक्कै भन्छन् तर अभियभावकले यसतर्फ ध्यान नै दिंदैनन् ।

शहरका अभिभावकहरुलाई चाहीँ शायद शिशुलाई भोजन भान्छामा बनाएर ख्वाउन फुर्सद हुँदैन, अनि बाहिरका प्याकेटका खानाको भर पर्छन् । जब बच्चा बिरामी पर्छन् तब डाक्टर र अस्पतालमा जाँदा जसरी भएपनि फुर्सद निकाल्छन् । बाबुआमा, बाजेबज्यै, दिदीदाजु सबैको जिम्मेवारी शिशु र बालबालिकाको भोजन र स्वास्थको लागि उतिकै हुन्छ । शिशु र बालबालिकालाई तरल पदार्थ दिने नाममा विभिन्न थरिका बट्टाका फलफूलका रस दिने चलन पनि बढ्दो छ । तर यस्ता जुसमा ८० प्रतिशतसम्म चिनीको मात्रा हुन्छ । यसले बच्चालाई एकछिन गुलियो स्वाद त दिन्छ तर कुनै पौष्टिकता दिंदैन, हानी नै पुऱ्याउँछ । यसरी फलफुलको रस बनाउने कारखानामा कुहिएका, सडेका फलफूल पनि प्याकेटमा राखेपछि केही थाहा हुन्न ।

बालबालिकालाई मौसम अनुसारको कुनै पनि फलफूल अमला, अम्बा, नास्पती, आँप, लिची नै दिए स्वस्थ्य रहन मद्दत गर्छ । एउटा कुरा चाहि के विचार गर्नु पर्छ भने समय भन्दाअघि पाकेको आँप, लिची, तरबुजा आदि औषधि हालेर पकाइएका पनि हुन सक्छन् र यिनले बच्चालाई पेट दुख्न, झाडापखाला लाग्ने आदि समस्या हुन सक्छ ।

साना शिशुलाई त अभिभावकले आफूले चाहेअनुसार पौष्टिक तत्वले भरिपूर्ण भोजन दिन सक्छन् तर जब बच्चा स्कुल जान थाल्छ तब उसलाई घरको खानेकुराभन्दा बाहिरको प्याकेटको खानेकुरा खान मन लाग्ने हुन्छ । उनीहरु अरुको देखासिकी गरेर र विज्ञापनको प्रभावमा परेर प्याकेटको खानेकुरामा आकर्षित हुन्छन् । 'टाइम्स अफ इण्डिया' पत्रिकामा केही समयअघि प्रकाशित लेखमा प्याकेटमा राखेका खानेकुराहरुमा स्वाद बढाउन विभिन्न रसायनिक पदार्थ र चिल्लो पदार्थ राखिएको हुन्छ, जसले गर्दा खानेकुरा लामो समय बिग्रन दिदैन र खानेकुरा सधैँ ताजा जस्तै त देखिन्छन् तर वास्तवमा यी हानिकारक नै हुन्छन् भनी उल्लेख गरिएको थियो । त्यसैले बालबालिकाले स्कूलमा खाना वा खाजा लैजाँदा प्याकेटको वस्तु लैजान दिनु हुँदैन । घरबाट लगेको खाजा फोहोरी होइन स्वास्थ्य राम्रो हो भन्ने बुझाउनुपर्छ । यसो गर्न सकिएमा आजका बालबालिका भोलिका स्वस्थ नागरिक हुन सक्छन् । ( लेखक जनस्वास्थ्य तथा पोषणविद् हुन् ) रासस

# कोलेस्ट्रोल नियन्त्रणमा राख्न खाली पेटमा अदुवाको जुस पिउनुहोस्

काठमाडौं । धेरैजसो मानिसले चियामा अदुवा मिसाएर पिउने गर्छन् । जाडोमा खानामा अदुवाको प्रयोग गर्नुपर्छ । मानिसहरु अदुवाको चिया पिउन रुचाउँछन् । तर अदुवाको जुस पिउँदा पनि धेरै फाइदा हुन्छ । एक अध्ययनका अनुसार अदुवाको रसले शरीरमा जम्मा भएको खराब कोलेस्ट्रोललाई कम गर्न सकिन्छ। अदुवालाई आयुर्वेदमा उत्कृष्ट औषधि मानिन्छ ।

अदुवाको प्रयोग जाडोमा र सुक्खा अदुवा गर्मीमा प्रयोग गर्नुपर्छ जब अदुवा मौसममा हुँदैन। अदुवाको चिया रुघाखोकी र खोकीमा फाइदाजनक हुन्छ । जाडो मौसममा अधिकांश घरमा अदुवाको प्रयोग गरिन्छ । अदुवाको सेवनले शरीरलाई धेरै रोगबाट टाढा राख्छ ।

अदुवाले इम्युनिटी बलियो बनाउनुका साथै खराब कोलेस्ट्रोल घटाउन पनि मद्दत गर्छ। अदुवामा पाइने तत्वले खराब कोलेस्ट्रोलको स्तर कम गर्छ। यसले तौल घटाउन पनि मद्दत गर्छ । खराब कोलेस्ट्रोल घटाउन अदुवाको जुस निकै फाइदाजनक हुन्छ । अदुवामा एन्टी इन्फ्लेमेटरी गुण पाइन्छ जसले शरीरमा सूजन कम गर्छ। अदुवाको जुस मधुमेहका बिरामीका लागि पनि फाइदाजनक हुन्छ ।

अदुवामा के कस्ता पोषक तत्व पाइन्छ ?

अदुवामा भिटामिन, मिनरल्स र एन्टिअक्सिडेन्ट प्रशस्त मात्रामा पाइन्छ । यसमा जिंजरोल नामक एन्टिअक्सिडेन्ट हुन्छ, जसले सूजन कम गर्छ। अदुवामा भिटामिन बी-६ र भिटामिन सी पनि हुन्छ, जसले प्रतिरक्षा प्रणालीलाई बलियो बनाउँछ। यसमा पोटासियम र म्याग्नेसियम हुन्छ, जसले रक्तचाप र हृदय रोगको जोखिम कम गर्छ।

कोलेस्ट्रोल बढेपछि यस्ता रोग लाग्ने खतरा बढ्छ

खराब कोलेस्ट्रोल घटाउन अदुवाको जुसः शरीरमा खराब कोलेस्ट्रोलको मात्रा बढ्नाले हृदयाघात र स्ट्रोकको खतरा बढ्छ । अदुवामा पाइने अदुवाले खराब कोलेस्ट्रोल घटाउन मद्दत गर्छ।

अदुवाको रस पिउनाले ट्राइग्लिसराइड्स र कुल कोलेस्ट्रोलको स्तर पनि कम गर्न सक्छ। यसमा पाइने एन्टिअक्सिडेन्टले नसामा प्लाक जम्ने समस्यालाई कम गर्छ । अदुवाको रस पिउनाले शरीरमा पित्तको रस बढ्छ, जसले कोलेस्ट्रोललाई तोड्छ।

यो अदुवाको रस कहिले र कसरी पिउने ?

अदुवाको जुस बनाउने तरिका : यसका लागि २-३ इन्चको अदुवाको टुक्रा पिस्नुहोस् वा पिस्नुहोस् । अदुवालाई मिक्सरमा पिसाउन पनि सकिन्छ । अब अदुवालाई मलमलको कपडामा हाल्नुहोस् र कपडालाई बलियोसँग निचोड्नुहोस्।

अदुवाको रस तीतो हुन्छ, त्यसैले यसको स्वाद सुधार गर्न तपाईले यसमा मह र कागती थप्न सक्नुहुन्छ। यो जुस बिहान खाली पेटमा पिउनाले फाइदाजनक हुन्छ । तपाईंले मात्र १-२ चम्मच रस संग सुरु गर्नुपर्छ।

# डार्क चकलेटका ६ फाइदाहरू

काठमाडौं । डार्क चकलेट मुटु र दिमागका लागि मात्र नभई समग्र स्वास्थ्यका लागि पनि फाइदाजनक मानिन्छ । यसमा कोको नामक पदार्थ थपिन्छ, जसले मस्तिष्कलाई चाँडै सक्रिय बनाउँछ। यसको स्वाद अलि कडा र मीठो हुन्छ। डार्क चकलेटमा गरिएका धेरै अध्ययनहरूले यसलाई सही र सीमित मात्रामा सेवन गर्ने हो भने यसले धेरै फाइदाहरू हुने देखाएको छ।

डार्क चकलेट मुटु र मस्तिष्कको लागि रामबाण उपाय हो। यसले शरीरमा सेरोटोनिन र एन्डोर्फिन हर्मोन बढाएर शरीरलाई आराम दिन्छ। यो खानाले मानिसलाई खुसी बनाउँछ। यसको सेवनले तनाव र चिन्ताबाट मुक्ति मिल्छ । डार्क चकलेटमा धेरै एन्टिअक्सिडेन्टहरू पाइन्छ, जसले शरीरमा फ्री रेडिकल बन्न दिंदैन, जसका कारण उमेरमा असर पर्दैन।

डार्क चकलेटका फाइदाहरू

हृदय रोगहरु टाढा रहन्छ

डार्क चकलेट मुटुको स्वास्थ्यका लागि निकै फाइदाजनक मानिन्छ । यसको सेवनले मुटु सम्बन्धी रोगहरु टाढा रहन्छन् । यसले हृदय रोग, हृदयघात, हृदयघात र स्ट्रोक जस्ता खतरनाक समस्याहरूको जोखिम कम गर्न सक्छ।

रक्तचाप नियन्त्रण गर्नुहोस्

ज्त को समाचार अनुसार, अपोलो स्पेक्ट्रा अस्पताल मुम्बईका डाइटिशियन डा जिनल पटेलले डार्क चकलेटका फाइदाहरू बताउनुभयो। डार्क चकलेटमा फ्लेभोनोइड्स पाइन्छ जसले रक्तचाप नियन्त्रण गर्न र मुटुसम्बन्धी रोगको जोखिम कम गर्न मद्दत गर्ने उनको भनाइ छ ।

कोलेस्ट्रोल घटाउनुहोस्

हार्वर्ड हेल्थले गरेको एक अध्ययनले केही प्रकारका चकलेटले कोलेस्ट्रोल घटाउन सहयोगी हुने देखाएको छ । अध्ययनमा संलग्न व्यक्तिहरूलाई २८ दिनसम्म खानको लागि ३० ग्राम डार्क चकलेट दिइएको थियो ।

चकलेटमा लाइकोपीन पाइने मानिसहरूमा खराब कोलेस्टेरोलको स्तर नियन्त्रण देखियो। ट्राइग्लिसराइड्समा कमी पनि देखियो।

मस्तिष्क स्वास्थ्य बलियो बनाउनुहोस्

डार्क चकलेटले शरीरमा सेरोटोनिन-एन्डोर्फिन हर्मोन बढाउँछ। यसलाई फिल गुड हर्मोन पनि भनिन्छ। यी हर्मोनहरूले शरीरलाई आराम दिन्छ र मनलाई भित्रैबाट खुसी बनाउँछ, जसको मतलब व्यक्ति प्रफुल्ल रहन सक्छ। यसले तनाव र डिप्रेसनलाई पनि टाढा राख्छ।

वजन नियन्त्रण गर्नुहोस्

डार्क चकलेटले तौल घटाउन पनि मद्दत गर्छ। यो खाएपछि कम भोक लाग्छ । यसले धेरै खानबाट जोगाउँछ र तौल नियन्त्रण गर्न पनि मद्दत गर्छ। त्यसैले तौल घटाउने यात्रामा यसलाई राम्रो मानिन्छ ।

मेटाबोलिज्म बढाउन काम गर्छ

डार्क चकलेटमा मोनोस्याचुरेटेड फ्याटी एसिड पाइन्छ, जसले मेटाबोलिज्म बढाउन काम गर्छ। यसले क्यालोरी बर्न गर्न मद्दत गर्छ र शरीरले धेरै अनावश्यक रोगहरूबाट बच्न सक्छ।

त्रिमTIMES

# मंगलग्रहमा ९० दिनमा पुग्न सकिने मस्कको दावी !



एजेन्सी । स्पेस एक्सका प्रमुख र सीईओ एलन मस्कले आफ्नो निर्णय र नवीन विचारले संसारलाई सधैं चकित पारिरहेका छन् । यसैबीच मस्कले अहिले अर्को अनौठो दाबी पेश गरेका छन् । अहिलेको प्रविधिले मंगल ग्रहमा पुग्न ९ देखि १२ महिना लाग्छ तर यो यात्रा ९० दिनमा मात्र सीमित हुन सक्ने मस्कले बताए ।

मंगल ग्रहमा पुग्नको लागि समय कम गर्न मस्कले हाल आफ्नो अन्तरिक्ष यान स्टारशिपलाई फरक तरिकाले डिजाइन गर्दैछ । पूर्ण रूपमा इन्धनले भरिएको यो अन्तरिक्ष यान यात्राको क्रममा ३६ हजार किलोमिटर प्रतिघण्टाभन्दा बढीको गतिमा पुग्न सक्छ । यसबाट पृथ्वी र मंगल ग्रहको दूरी ८० देखि १०० दिनमा पूरा गर्न सकिन्छ, जुन हालको अन्तरिक्ष यानको तुलनामा ठूलो सुधार हो ।

वर्तमानमा अन्तरिक्ष यान सामान्यतया ३९ हजार ६ सय किलोमिटर प्रति घण्टाको गतिमा यात्रा गर्दछ । जसका कारण मंगल ग्रहमा पुग्न निकै समय लाग्छ । तर मस्क विश्वास गर्छन् कि नयाँ प्रविधिहरू, जस्तै अर्बिटल इन्धन भर्ने र थप शक्तिशाली इन्जिनहरूले यात्राको समयलाई अझ घटाउन सक्छ । केही अनुमानका अनुसार यी प्रविधिहरू प्रयोग गरेर स्टारशिप ४५ देखि ९० दिनमा मंगल ग्रहमा पुग्न सक्छ ।

स्पेसएक्सले यो यात्रामा स्टारशिपसँगै इन्धन ट्याङ्करहरू पनि पठाउने प्रस्ताव गरेको छ । यिनीहरूले मुख्य अन्तरिक्ष यानलाई बीचमा इन्धन भर्ने काम गर्नेछन् । यसले गति मात्र बढाउने छैन, सवारी साधनले बढी भार बोक्न पनि सक्षम हुनेछ ।

उच्च गतिको अन्तरिक्ष यात्राका धेरै फाइदाहरू छन् । सबैभन्दा महत्त्वपूर्ण कुरा हानिकारक ब्रह्माण्ड विकिरणबाट अन्तरिक्ष यात्रीहरूलाई बचाउनु हो । लामो यात्रामा यी विकिरणको प्रभाव बढ्न सक्छ । जसका कारण स्वास्थ्यमा ठूलो जोखिम मोल्नुपर्छ । छोटो यात्रा समय भनेको मिशनमा कम आपूर्तिहरू लैजानु पर्छ, अन्तरिक्ष यानलाई हल्का र अधिक कुशल बनाउन जरुरी छ ।

एलन मस्क मंगल ग्रहमा पुग्न मात्र होइन, त्यहाँ मानिसलाई बसाउने सोचमा पनि छन् । एलन मस्कको मुख्य उद्देश्य मंगल ग्रहमा मानव बस्ती स्थापना गर्नु हो । तिनीहरूका योजनाहरू प्राविधिक रूपमा महत्वाकांक्षी मात्र छैनन्, तर पृथ्वीभन्दा बाहिर बसोबास गर्न मानवतालाई सक्षम पार्ने एक प्रमुख कदमको रूपमा पनि



हेरिन्छ ।

कम्पनीले अब सन् २०२५ मा सातौं परीक्षणको तयारी गरिरहेको छ । स्टारशिपको पहिलो कक्षीय प्रक्षेपणको घोषणाले अन्तरिक्ष समुदायमा पहिले नै उत्साह उत्पन्न गरेको छ । यदि एलन मस्कको योजना सफल भयो भने यसले अन्तरिक्ष यात्राको काम गर्ने तरिकालाई पूर्ण रूपमा परिवर्तन गर्नेछ । अन्य ग्रहहरूमा मानव बसोबासको सम्भावना वास्तविकता हुन सक्छ । हाल, सम्पूर्ण अन्तरिक्ष समुदाय यस दिशामा मस्कको अर्को कदमको लागि उत्सुकतापूर्वक पर्खिरहेको छ ।

# खेलाडीको न्यायका लागि मेची महाकाली हस्ताक्षर अभियान

भक्तपुर । मकवानपुरको सिस्नेरी पहिरोमा परी ज्यान गुमाएका खेलाडीहरुको न्यायको लागि भन्दै भक्तपुरबाट हस्ताक्षर अभियान आरम्भ भएको छ । उच्च स्तरीय संसदीय छानविन समिति गठनको माग गर्दै मेची महाकाली हस्ताक्षर अभियान शुरु भएको हो । अखिल नेपाल फुटवल संघ (एन्फा) कै कमजोरीका कारण उक्त घटनामा अभिभावकले आफ्ना अबोध बच्चाहरू गुमाएका र खेल क्षेत्रले भविष्यका होनहार खेलाडी गुमाएको भन्दै 'हाम्रो अभियान नेपाली फुटबलमा आमुल परिवर्तन' समूहले हस्ताक्षर अभियान शुरु गरेको जनाएको छ । आयोजक हाम्रो अभियान नेपाली फुटबलमा आमुल परिवर्तनका संयोजक राम प्रजापतिले देशव्यापी हस्ताक्षर संकलन गरि जिल्ला प्रशासन कार्यालय र प्रतिनिधि सभाका सभामुख समक्ष बुझाउने कार्यक्रम रहेको बताएका छन् । हस्ताक्षर अभियान एक महिनासम्म संचालन गरिने र प्रत्येक जिल्लामा पुग्ने अभियानका संयोजक प्रजापतिले प्रष्ट पारे ।

हस्ताक्षर अभियानले गत असोज १२ गते मकवानपुर जिल्लाको इन्द्रसरोवर गाउँपालिका-३ स्थित वात्सल्यदेवी स्कुलमा पहिरोमा परी एन्फा सिस्नेरी एकेडेमीमा रहेका ६ किशोर खेलाडीको ज्यान गएको विषयमा उच्च स्तरीय संसदीय छानविन समिति गठनको उदेश्य बोकेको छ ।

उक्त घटनामा एकेडेमीमा रहेका किशोर खेलाडीहरु आदित्य बलम्पाखी, विकल रेग्मी, प्रियान्स आचार्य, दिवस बानियाँ, अनुपम घलान र साइमल योन्जनको ज्यान गएको थियो । कुलेखानीको ड्याम खोलेपछि पानीले बगाउँने हल्ला र त्रासले बच्न निस्केका किसोर खेलाडीहरुको पहिरोमा परी ज्यान गएको थियो ।

पीडित परिवारले यस अघि राजधानीमै पत्रकार सम्मेलन गरि घटनाको छानविन हुनुपर्ने माग राखेका भएपनि सुनुवाइ नभएको गुनासो गर्दै आएका छन् । यस्तो घटना भइसक्दा पनि एन्फाले कुनै छानविन नगरेको र नेतृत्वले ज्यान गुमाउनेका आफन्तलाई थप पीडा दिएको आरोप छ ।

# यु-१९ एसिया कपः नेपालद्वारा अफगानिस्तान पराजित

काठमाडौं । संयुक्त अरब इमिरेट्स (युएई) मा जारी उन्नाइस वर्षमुनिको एसिया कप क्रिकेट प्रतियोगिताको अन्तिम खेलमा नेपालले अफगानिस्तानलाई एक विकेटले पराजित गरेको छ ।दुबईको शारजाह क्रिकेट मैदानमा टस जितेर अफगानिस्तानले पहिला ब्याटिङ गर्दै ३५ दशमलव चार ओभरमा सबै विकेट गुमाएर एक सय २३ रन बनायो । एक सय २४ रनको लक्ष्य नेपालले ४१ दशमलव तीन ओभरमा नौ विकेट गुमाएर पुरा गर्‍यो ।

नेपालका लागि नरेन साउदले सर्वाधिक २६, कप्तान हेमन्त धामीले २२, अर्जुन कुमालले २१, अभिषेक तिवारीले १३, आकाश त्रिपाठी र रोशन विश्वकर्माले समान नौ/नौ तथा सन्तोष यादवले सात रन बनाए । नेपालले १२ अतिरिक्त रन प्राप्त गर्‍यो ।

बलिङतर्फ अफगानिस्तानका एएम गजानफर र खातिर स्तानिकजाईले तीन/तीन तथा अब्दुल अजिज र महबूब खानले एक/एक विकेट लिए । यसअघि अफगानिस्तानका लागि एक सय २३ रन बनाउने क्रममा फैसल खानले सर्वाधिक ५२ रन जोडे । उनले ६७ बलमा चार चौका र दुई छक्का प्रहार गरे । खातीर खानले २६ बलमा १५ रन जोडे । अल्लाह गजान्फरले ११ तथा नासिर खानले १० रन बनाए ।

बलिङतर्फ नेपालका लागि युनिशविक्रम सिंह ठकुरी र सन्तोष यादवले तीन तीन तथा हेमन्त धामी र अभिषेक तिवारीले दुई दुई विकेट लिए । यसअघि नेपाल पहिलो खेलमा श्रीलङ्कासँग ५५ रन र दोस्रो खेलमा बङ्गलादेशसँग पाँच विकेटले पराजित भएको थियो । अफगानिस्तान यसअघि पहिलो खेलमा बङ्गलादेशसँग ४५ रन र दोस्रो खेलमा श्रीलङ्कासँग एक सय ३१ रनले पराजित भएको थियो । दुवै टोली एसिया कपबाट बाहिरिएका छन् ।

# लिभरपुल लिगको शीर्षस्थानमा थप मजबुत बन्दै

एजेन्सी - चेल्सी इङ्लिस प्रिमियर लिग आइतवार विजयी भएको छ। स्ट्यामफोर्ड ब्रिजमा चेल्सीले एस्टन भिल्लालाई ३-० ले पराजित गरेको हो। सातौं मिनेटमै निकोलस ज्याक्सनले गोल गर्दै अग्रता दिलाए। ३६औं मिनेटमा कोल पाल्मरको पासमा एन्जो फर्नाण्डेजले गोल गरे। नोनी मडुकेको पासमा ८३औं मिनेटमा पाल्मरले गर्दै चेल्सीको जित पक्का गरे।

१३ खेलमा २५ अंकसहित चेल्सीले तेस्रो स्थानमा छ । भिल्ला १९ अंकसहित १२औं स्थानमा छ। अर्को खेलमा म्यानचेस्टर युनाइटेडले एभर्टनलाई ४-० हराएको छ । युनाइटेडका लागि मार्कस रासफोर्ड र जोसुआ जिर्कजीले समान २ गोल गरे ।

१३ खेलपछि १९ अंक जोड्दै युनाइटेड तालिकामा नवौं स्थानमा पुगेको छ। ११ अंकसहित एभर्टन तालिकाको १५औं स्थानमा छ त्यस्तै लिभरपुल लिगको शीर्षस्थानमा थप मजबुत बन्दै गएको छ । लिभरपुलले आइतवार म्यानचेस्टर सिटीलाई २-० ले हराउँदै लिगमा थप बलियो बनेको हो । लिभरपुललाई जित दिलाउन कोडी गाक्पो र मोहम्मद सलाहले गोल गरे ।

१२औं मिनेटमा गाक्पोको गोलमा अग्रता लियो । ७८ औं मिनेटमा लिभरपुलले अग्रता दोब्बर पार्‍यो । सिटीका गोलकिपर स्टेफान ओर्टेगाले सलाहका लुइस डियाजलाई फाउल गरेपछि लिभरपुलले पेनाल्टी पायो । सलाहले गोल गर्दै टोलीको जित निश्चित गरे ।

१३ खेलमा लिभरपुलको ३४ अंक पुगेको छ । सिटी २३ अंकका साथ पाँचौं स्थानमा छ ।

# मोबाइल तातेर हैरान हुनुहुन्छ, यसो गर्नुहोस् !



काठमाडौं । आजको समयमा स्मार्टफोनको प्रयोग यतिसम्म भइसक्यो कि मानौं मान्छेका हरेक काममा नै यही दाहिने हात हो । यो धेरैजसो मानिसको आवश्यकता नै बनेको छ । फोन कल गर्नदेखि लिएर अनलाइन किनमेल र भुक्तानीहरू सबै कामका लागि स्मार्टफोनहरू प्रयोग हुने गर्छन् । यो बालक देखि वृद्धसम्मका लागि निकै महत्त्वपूर्ण साधन बनिसकेको छ ।

आजकलका आमाहरूले भन्ने गरेको त पक्कै पनि सुन्नु भएको होला कि मेरो बच्चाले त मोबाइल बिना खाना नै खान मान्दैन । मोबाइल देखायो भने मजाले खाना खान्छ भनेको । यसरी हरेकको जीवनमा महत्त्वपूर्ण बनेको मोबाइलमा विभिन्न समस्याहरू आउने गर्छन् । त्यसमा पनि पहिलो कारण हो । तात्ने समस्या ।

धेरै बेरसम्म मोबाइल चलाउँदा भिडियोहरू हेर्दा वा इन्टरनेट चलाउँदा मोबाइल तात्ने गर्छ भने कहिलेकाहीं यत्तिकै पनि मोबाइल तातिरहेको हुन्छ । फोन तातो भएका कारण तपाईंले केही बेर मोबाइल अफ पनि गर्नु भएको होला । केहीले त मोबाइलमा थप केही समस्या आयो कि भनेर मोबाइल बनाउने स्थानमा समेत लाने गर्नु भएको होला ।

स्मार्टफोनमा कुनै भाइरस छ भनेर पनि मोबाइल सामान्यभन्दा बढी नै तात्न थाल्दछ । यस्ता भाइरसले तपाईंको डाटा सर्भिसलाई गोप्य तरिकाले निरन्तर प्रयोग गरिरहेको हुन्छ । जीपीएस धेरै बेर सम्म प्रयोग गरिरहँदा वा ब्लुटूथ स्पिकरबाट म्युजिक बजाइरहँदा पनि तात्ने समस्या आउन सक्छ । कहिलेकाहीं, अति धेरै डाटा प्रोसेसिङ्गको कारण पनि स्मार्टफोन तातो हुन जान्छ ।

यदि स्मार्टफोनलाई अलि धेरै बेरसम्म चार्जमा छोड्यो भने कहिलेकाहीं तात्ने समस्या आउन सक्छ, यस्तो समस्या नआउनुपर्ने हो तर पुरानो मोडेलका स्मार्टफोनहरू जसलाई लामो समयसम्म प्रयोगमा ल्याइयो, त्यसमा तात्ने समस्या आउन सक्दछ ।

कतिपयले क्यामेराबाट फोटो लिँदा समेत मोबाइल तातेको इन्टरनेटमा गुनासो गर्ने गर्छन् । धेरै बेरसम्म बढी ग्याम ओगट्ने गेम वा एप चलाउँदा पनि स्मार्टफोन नमज्जाले तात्ने हुन्छ ।

चार्ज गर्दै गेम खेल्ने, फेसबुक चलाउने अथवा फोन गर्ने गर्नुहुन्छ भने पनि स्मार्टफोन बढी तात्ने समस्या आउने गरेको छ ।

यसरी गर्नुहोस् समाधान

आफूलाई नचाहिएको बेलामा वाईफाई, ब्लुटूथ, जीपीएस जस्ता ब्याट्री र मेमोरी ओगट्ने सर्भिसलाई बन्द गर्दै ठिक हुन्छ । कहिलेकाहीं ब्याकग्राउण्डमा धेरै एपहरू खुलेको छ भने पनि एण्ड्रोइड मोबाइल तात्ने हुन्छ, त्यसैले त्यस्ता ब्याकग्राउण्डमा चलेका एपहरूलाई बन्द गरिदिनुहोस् ।

फोनको सुरक्षाका लागि फोनमा बाहिरि खोल राखिन्छ । तर कहिलेकाँही यही कभरले समस्या ल्याइदिन सक्छ । । त्यसैले फोन धेरै तातेको बेला त्यसको बाहिरी खोल निकालेर केही बेर राख्नु पर्छ ।

पुरानो मोडेलको स्मार्टफोनको ब्याट्री फुलेको छ वा छैन भनी एक चोटि जाँच गर्नुहोस् । फुलेको छ भने त्यसको प्रयोग गर्नुहुँदैन, पडिकन सक्छ । अर्को ब्याट्री राख्नुहोस् ।

फोनलाई प्रत्यक्ष घामबाट टाढा राख्नुपर्छ । कडा सूर्यको प्रकाशको कारणले गर्दा स्मार्टफोन छिटै तातो हुन्छ । यदि तपाईंको मोबाइलमा भाइरस लाग्यो कि भनेर शङ्का गर्नुभयो भने, एक चोटि खोलिएका सबै एपहरूलाई बन्द गर्नुहोस् र एप सेटिङ्गसमा गएर इन्टलेसन फर अननोन सोर्स लाई बन्द गरिदिनुहोस् ।

तपाईंको चार्जर केवल र एडप्टर डुप्लिकेट छ भने पनि मोबाइल ब्याट्रीलाई अत्यधिक तताउँदछ । त्यसैले सकेसम्म डुप्लिकेट केवलको प्रयोग नगर्दै उचित हुन्छ ।

तपाईंले मोबाइलमा इन्टरनेट प्रयोग गर्दा एक वा दुई भन्दा धेरै सामाजिक सञ्जाल प्रयोग गर्नुहुन्छ । जसले गर्दा तपाईंको मोबाइलमा सारा एप्पहरु एकसाथ काम गर्छन् । या त कुनै पनि ब्राउजरबाट तपाई धेरै पेज खोलेर चलाउनुहुन्छ भने मोबाइललाई बढी लोड पर्न जान्छ । त्यसैले तपाई अनावश्यक र काम सकिएसँगै पेजहरू बन्द गर्नुहोस् ।

त्रिमTIMES
वर्ष १८ अङ्क १८ २०८१ मंसीर १९ गते बुधबार
04 Dec. 2024 Wednesday


## उपनिर्वाचन....

एक सय, नेपाल कम्युनिष्ट पार्टी (एकीकृत समाजवादी)का रविना खड्काले ९० मत प्राप्त गरेको निर्वाचन आयोगले जनाएको छ ।

हुम्लाको सर्केगाड गाउँपालिकाको उपाध्यक्षमा माओवादी केन्द्रकी देवकी तिमिल्सिना विजयी भएकी छिन् । नेपाली कांग्रेसका उम्मेदवार सविता बुढालाई पछि पार्दै माओवादी केन्द्रका उम्मेदवार तिमिल्सिनाले ४३ मत अन्तरले विजयी भइन् । सर्केगाडमा छ हजार आठ सय १० मतदाता रहेकामध्ये चार हजार पाँच सय २४ मत खसेको थियो । तिमल्सिनाले एक हजार छ सय ३७ मत ल्याएर विजय हासिल गरेकी हुन् ।

उनकी निकटतम् प्रतिद्वन्द्वी नेपाली कांग्रेसकी सविता बुढाले एक हजार पाँच सय ९४, नेकपा एमालेकी जाना शाहीले एक हजार एक सय ३२, राष्ट्रिय प्रजातन्त्र पार्टीकी सङ्गीता शाहीले ५१, राष्ट्रिय स्वतन्त्र पार्टीकी बाँचा बुढाले २५ र स्वतन्त्र उम्मेदवार नरेश शाहीले नौ मत प्राप्त गरेका छन् ।

आयोगका अनुसार उदयपुरको बेलका नगरपालिका-९ को वडाध्यक्षमा माओवादी केन्द्रका भरत घिमिरे पाँच सय ५९ मत प्राप्त गरी विजयी भएका छन् । उनका निकटतम प्रतिस्पर्धी मोहन खड्काले पाँच सय २५, नेपाली कांग्रेसका नवराज बस्नेतले चार सय चार, जनता समाजवादी पार्टीका राजकुमार राईले दुई सय सात, राष्ट्रिय स्वतन्त्र पार्टीका तेजमान विश्वकर्माले एक सय २३ मत पाए ।

मत परिणामअनुसार कांग्रेसले कीर्तिपुरको प्रमुखसहित १६ वडाध्यक्षमा जीत हासिल गरेको छ । यसैगरी एमाले एक गाउँपालिका अध्यक्ष, दुई गाउँपालिका उपाध्यक्ष र पाँच वटा वडामा विजयी भएको छ । माओवादी केन्द्रले एक गाउँपालिका अध्यक्ष, दुई गाउँपालिका उपाध्यक्ष र एक नगरपालिका उपाध्यक्षसहित सात वटा वडामा जीत हासिल गरेको छ ।

उपनिर्वाचनमा जसपा नेपाल दुई, एकीकृत समाजवादी, राष्ट्रिय स्वतन्त्र पार्टी, नेपाल मजदुर किसान पार्टी एक/एक स्थानमा विजयी हुँदा एक स्वतन्त्र उम्मेदवारले पनि वडाध्यक्षमा स्थान बनाएका छन् । कूल ४४ पदका लागि उपनिर्वाचनको कार्यतालिका रहे पनि आइतबार ४१ पदका लागि मात्रै मतदान भएको थियो ।

ओखलढुङ्गा र कैलालीको जिल्ला समन्वय समितिको प्रमुख र रुकुमपूर्वको पुथा उत्तरगङ्गा-२ को वडाध्यक्ष निर्विरोध निर्वाचित भए । आयोगका अनुसार नगरपालिकाका प्रमुख एक जना, उपप्रमुख एक जना, गाउँपालिकाका अध्यक्ष दुई जना, उपाध्यक्ष चार जना तथा वडाध्यक्ष ३३ जना गरी जम्मा ४१ पदका लागि भएको उपनिर्वाचनमा राजनीतिक दलका दुई सय ७४ जना र स्वतन्त्र एक सय दुई जना गरी जम्मा तीन सय ७६ उम्मेदवार थिए ।

कहाँ को निर्वाचित ?

मोरङको ग्रामथान गाउँपालिकाको अध्यक्षमा माओवादी केन्द्रका नमोनारायण माझी छ हजार नौ सय ६९ मत प्राप्त गरी विजयी भए । उनका प्रतिस्पर्धी कांग्रेसका बलराम सरदार थारुले पाँच हजार तीन सय ३३ मत प्राप्त गरे ।

दैलेखको महाबुँ गाउँपालिकाको अध्यक्षमा एमालेका जङ्गबहादुर शाही तीन हजार एक सय २७ मतसहित विजयी भएका छन् । उनका प्रतिस्पर्धी कांग्रेसका झलकबहादुर भण्डारीले दुई हजार छ सय ७५ मत ल्याए ।

जाजरकोटको नलगाड नगरपालिकाको उपप्रमुखमा माओवादीका देवका लामिछाने चार हजार दुई सय ७२ मत पाई निर्वाचित भइन् । उनका निकटतम् प्रतिस्पर्धी कांग्रेसका इन्द्रा चन्द (सिंह) ले तीन हजार एक सय ४७ मत प्राप्त गरिन् ।

रुकुम (पूर्व भाग)को पुथा उत्तरगङ्गा गाउँपालिकाको उपाध्यक्षमा माओवादी केन्द्रका नरपुर बुढा तीन हजार छ सय २७ मत ल्याएर विजयी भइन् । प्रतिस्पर्धी एमाले-कांग्रेस गठबन्धनका उम्मेदवार केशकुमारी तुलाचनले दुई हजार एक सय २८ मत मात्रै पाइन् ।

बाजुराको स्वामीकार्तिक खापर गाउँपालिका उपाध्यक्षमा एमालेका सुलोचनाकुमारी भण्डारी विजयी भइन् । उनले एक हजार सात सय ४० मत ल्याउँदा कांग्रेसका पुल्तीसरा शाहीले एक हजार चार सय ७४ मत पाइन् ।

ताप्लेजुङको सिरिजङ्गा गाउँपालिका-३ मा एमालेका कुमारी सावादेन तीन सय ५३ मतसहित विजयी भएकी छिन् । उनकी निकटतम् प्रतिद्वन्द्वी माओवादी केन्द्रका अम्बी साउदेनले दुई सय ५१ मत प्राप्त गरिन् । झापाको कन्काई नगरपालिका वडा नं ६ मा स्वतन्त्र उम्मेदवार लक्ष्मीप्रसाद ओली चार सय ९३ मत प्राप्त गरी विजयी भइन् । प्रतिद्वन्द्वी एमालेका तुलाराम बस्नेतले तीन सय ५६ मत पाए ।

तेह्रथुमको लालीगुराँस नगरपालिका-८ मा कांग्रेसका नगेन्द्र लिम्बू चार सय ४० मत प्राप्त गरी विजयी भएका छन् । उनीसँग एमालेका बुद्धबहादुर लिम्बू तीन सय ६० मत प्राप्त गरी पराजित भए । सुनसरीको गढी गाउँपालिका-६ मा कांग्रेसका तेतर साहु आठ सय १६ मत प्राप्त गरी विजयी हुँदा माओवादी केन्द्रका कुशेश्वर खेरवार सात सय ९४ मत प्राप्त गरी पराजित भएका छन् ।

ओखलढुङ्गाको मोलुङ गाउँपालिका-५ मा एमालेका गङ्गाबहादुर तामाङ तीन सय ९९ मत प्राप्त गरी विजयी भए । प्रतिस्पर्धी कांग्रेसका घनश्याम दाहाल एक सय ७७ मत पाएर पराजित हुनुपर्यो । उदयपुरको त्रियुगा नगरपालिका-१२ मा माओवादी केन्द्रका नवीनकुमार वान्तवा राई विजयी भएका छन् । उनले नौ सय २३ मत पाउँदा एमालेका लक्ष्मीनारायण चौधरीले छ सय आठ मत पाए ।

सप्तीको डाक्नेश्वरी नगरपालिका-१ को वडाध्यक्षमा जनता समाजवादी पार्टी, नेपालका धीरेन्द्रकुमार साह निर्वाचित भएका छन् । उनीसँग कांग्रेसका भूलियादेवी थरुनी पाँच सय ८७ मत मात्र प्राप्त गरी पराजित भए । डाक्नेश्वरी-४ मा जनता समाजवादी पार्टी नेपालकै देवेन्द्रप्रसाद यादव तीन सय ७२ मत प्राप्त गरी विजयी भएका छन् । उनका निकटतम प्रतिस्पर्धी कांग्रेसका जोगिन्द्रराय अमातले दुई सय ७७ मत पाए ।

धनुषाधाम नगरपालिका-१ मा माओवादी केन्द्रका सुनील कापर केवट छ सय ८४ मतसहित विजयी भए । उनका प्रतिस्पर्धी कांग्रेसका अशोककुमार मण्डललाई छ सय दुई मत प्राप्त भयो । महोत्तरीको रामगोपालपुर नगरपालिका-२ को वडाध्यक्षमा एमालेका सकिवुल खाँ छ सय ३१ मत प्राप्त गरी निर्वाचित हुँदा प्रतिस्पर्धी आइतीकुमारी यादवले पाँच सय ३४ मत प्राप्त पाए ।

रौतहटको ईशनाथ नगरपालिका-७ मा कांग्रेसका शेख अब्दुल खलिक छ सय २७ मतसहित विजयी हुँदा एमालेका शेख अनवार पाँच सय ७५ मत प्राप्त गरेका छन् । गढीमाई नगरपालिका-८ एकीकृत समाजवादीका बजरङ्गी प्रसाद यादवले छ सय ५५ मत प्राप्त गरी निर्वाचित भए । उनका प्रतिस्पर्धी एमालेका जीउतीदेवी यादवले छ सय ३१ मत पाउन सफल भए ।

रौटहटकै राजपुर नगरपालिका-६ को वडाध्यक्षमा कांग्रेसका समसे आलम सात सय ४४ मतसहित विजयी हुँदा माओवादीका जिकरलाह चार सय ६३ मत पाई पराजित भएका छन् । नुवाकोटको ककनी गाउँपालिका-२ मा माओवादी केन्द्रका कृष्ण घिमिरे एक हजार ८५ मत प्राप्त गरी विजयी भए । कांग्रेसका सूर्य तामाङले पाँच सय ८७ मत प्राप्त गरेका छन् ।

काठमाडौं महानगरपालिका-१६ का वडाध्यक्ष रोजिना श्रेष्ठले दुई हजार नौ सय दुई मत प्राप्त गरी विजयी हुँदा प्रतिस्पर्धी एमालेका लक्ष्मीरत्न तुलाधरले दुई हजार दुई सय २० मत प्राप्त गरी पराजित हुनुपर्यो ।

काठमाडौंका कीर्तिपुर नगरपालिका-१ मा कांग्रेसका इच्छाकुमार महर्जन पाँच सय ६२ मत पाई निर्वाचित हुँदा एमालेका हर्ष महर्जनले चार सय ९८ मत मात्रै पाए । वडा नं ४ मा कांग्रेसका राजेन्द्र बानियाँ विजयी भए । उनले सात सय ४२ मत पाउँदा स्वतन्त्र उम्मेदवार पविता खड्का (अधिकारी)ले चार सय ९५ मत पाइन् ।

मकवानपुरको हेटौंडा उपमहानगरपालिका १२ को वडाध्यक्षमा कांग्रेसका अर्जुनप्रसाद तिवारी दुई हजार ६३ मतसहित विजयी भए भने उनका प्रतिस्पर्धी माओवादीका रविकुमार प्रधान एक हजार पाँच सय ६० मतसहित पराजित हुनुपर्यो । गोरखाको गोरखा नगरपालिका-५ को वडाध्यक्ष पदमा माओवादीका विष्णुबहादुर मगर चार सय ८६ मत प्राप्त गरी निर्वाचित हुँदा प्रतिस्पर्धी भाइकाजी आलेले चार सय दुई मत मात्र ल्याए। गुल्मीको मुसिकोट नगरपालिका-१ को वडाध्यक्षमा कांग्रेसका आनन्द श्रेष्ठले एक हजार एक सय ८४ मत प्राप्त गरी विजयी भए भने प्रतिस्पर्धी एमालेका दलबहादुर थापाले नौ सय ३० मत ल्याउन सफल भए ।

कपिलवस्तुको शुद्धोधन गाउँपालिका- १ मा एमालेका मोहमद ताहिर मुलसलमाले एक हजार एक सय ५० मतसहित विजयी भएका छन्। उनका प्रतिस्पर्धी कांग्रेसका दिनेशकुमार यादवले एक हजार ७६ मत पाए। रोल्पाको रुन्टीगढी गाउँपालिका-४ मा कांग्रेसका भूपमणि पुनमगर छ सय ४३ मतसहित विजयी हुँदा एमालेका वेगम पुनले पाँच सय ३५ मत ल्याएका छन् ।

बर्दियाको ठाकुरबाबा नगरपालिका-४ मा कांग्रेस उम्मेदवार अमिन थारु एक हजार ४३ मत ल्याएर विजयी हुँदा प्रतिस्पर्धी शेरबहादुर थारुले छ सय ७८ मत पाए । डोल्पाको त्रिपुरासुन्दरी नगरपालिका-५ को वडाध्यक्षमा माओवादीका नरबहादुर झाँक्री एक सय ६१ मतसहित निर्वाचित भएका छन् । उनका प्रतिस्पर्धी नरबहादुर रोकाले एक सय १६ मत ल्याए ।

कालिकोटको तिलागुफा नगरपालिका-४ मा नेपाल मजदुर किसान पार्टीका खड्गराज शाही एक सय ४३ मतसहित विजयी हुँदा प्रतिस्पर्धी माओवादीका नौशोभा शाही एक सय १५ मतमा सीमित हुनुपर्यो । जाजरकोटको कुशे गाउँपालिका-७ मा कांग्रेसका खम्बबहादुर सिंह तीन सय ४७ मत ल्याएर विजयी हुँदा माओवादीका गोरखबहादुर नेपालीले तीन सय ३२ मत पाए । दैलेखको दुल्लु नगरपालिका-१३ को वडाध्यक्षमा एमालेका लालबहादुर शाही पाँच सय ७४ मत ल्याएर विजयी भएका छन् । उनका प्रतिस्पर्धी कांग्रेसका रेशमबहादुर शाहीले पाँच सय ७१ मत पाएका छन् । रुकुम (पश्चिम भाग) को सानीभेरी गाउँपालिका-५ मा कांग्रेसका मोतीराम खत्री पाँच सय ९० मतका साथ निर्वाचित भए भने उनका प्रतिस्पर्धी माओवादीका जसीराम बस्नेतले पाँच सय ३७ मत पाएका छन् ।

बझाङको सुर्मा गाउँपालिका-४ को वडाध्यक्षमा कांग्रेसका धीरेन्द्र पुजारा छ सय ५७ मतसहित विजयी हुँदा प्रतिस्पर्धी एमालेका लखीचन्द्र बोहोरा चार सय ८७ मतमा सीमित भएका छन्। डोटीको पूर्वीचौकी गाउँपालिका-६ मा कांग्रेसका मोहन थापा चार सय ६८ मतका साथ निर्वाचित भए । उनका निकटतम प्रतिस्पर्धी एमालेका देवबहादुर थापाले तीन सय एक मत पाए ।

दार्चुलाको दुहुँ गाउँपालिका-५ मा कांग्रेसका धनसिंह कुँवर तीन सय ७६ मतसहित विजयी हुँदा प्रतिस्पर्धी एमालेका मानसिंह बडाल तीन सय ५८ मतमा सीमित भएका छन् । कञ्चनपुरको भीमदत्त नगरपालिका-६ को वडाध्यक्षमा कांग्रेसका प्रकाश चन्द एक हजार एक सय सात मतसहित निर्वाचित भए । उनका प्रतिस्पर्धी एमालेका बहादुर चन्दले चार

## मध्यपुर....

पुनर्जिबित गर्न स्थानिय आमा, दिदी बहिनीहरू सक्रिय भएका छन ।

टिगनी बजी उत्पादनको प्रदर्शनको लागि स्थानीय महिलाहरुले परम्परागत ओखललगायतका सामग्रीहरुको संकलन शुरु गरिसकेको नगरपालिकाका प्रमुख एवम् मध्यपुर महोत्सव मूल समारोह समितिका सयोजक सुरेन्द्र श्रेष्ठले जानकारी दिएका छन् ।

उनले महोत्सवका बेला आगन्तुकहरुले टिगनी बजी उत्पादनका लागि धान भुट्ने, भिजाउने, चिउरा कुट्ने विधि प्रत्यक्ष हेर्न र चिउरा खरिद गरी लैजान सक्ने व्यवस्था गरिएको जानकारी दिए । यस्तै महोत्सवमा प्रदर्शन गरिने साँस्कृतिक झाँकी, परम्परागत पेशा व्यवसाय, मौलिक उत्पादनलगायतका विषय वस्तुहरुलाई विभिन्न १० वटा समूहमा विभाजन गरी सो अनुसारको स्टल व्यवस्थापन गरी प्रदर्शन गरिने पनि जानकारी दिए ।

महोत्सवमा स्थानीय मौलिक कला सँस्कृति अन्तर्गत बिस्का:जात्राको खत, पुलुकिसि जात्रा, महाकाली नाच, अष्टमातृका नाच, लाखे, नागाचा प्याखं, इन्द्र अप्सरा नाचहरुको प्रदर्शनी गरिनेछ । परम्परागत र मौलिक पेशा व्यवसाय अन्तर्गत माटोको भाँडा बनाउने, मुकुण्डो बनाउने, चिउरा कुट्ने, तेल पेल्ने, कपडा बुन्ने, बत्ती काट्ने, धूप बाट्ने, खेती गर्ने, गेडागुडी, मूर्तिकला, सेरामिक्स, चित्रकला र काष्ठकलाको प्रदर्शन गरिनेछ ।

नेवारी परिकारमा समय् बजि, वः (बारा), चटांमरी, योमरी लगायतका खानासँग सम्वन्धित स्टलहरु पनि रहनेछ । पुरातात्विक स्मारक क्षेत्र एवम् सम्पदा अन्तर्गत मध्यपुरको बालकुमारी क्षेत्रमा क्वलाखु बालकुमारी, अजिमा, बिष्णुविर, ईन्द्रायणी, लोकेश्वर मन्दिर, थिमिको लायकू, बाखाछे महादेव, दिगु भैरब, निगपुखु र बिष्णु कुण्दललगायतका मठ मन्दिर दरवार र पोखरीहरुको अवलोकन गर्न पाइनेछ । यस्तै चपाचो क्षेत्रमा इनायक्व (सिद्धिकाली), विश्वविनायक, दिगु बहाः, जिस्वाँ बहाः, सिद्धिकाली द्यछें, स्वगाँ पुखु, गुंगचिवाः, पाटी विहार, बाहाखा भिमसेन र महादेव मन्दिरलगायतका सम्पदा रहेका छन ।

नगदेश क्षेत्रमा सिद्धिगणेश द्यछें, लुँ भ्याः, नगदेश लायकु, सिद्धिगणेश मन्दिर, नगदेश बुद्धविहार र शिलेश्वर महादेवको दर्शन र अवलोकन गर्न सकिनेछ ।

बोदे क्षेत्रमा बोदेको लायकू, पलिस्वां पुखू, कालिका मन्दिर, विष्णुघाट, महालक्ष्मी, र कुमारी मन्दिर रहेको छ । टिगनी क्षेत्रमा नीलबाराही द्यछें र नील बाराही मन्दिरको अलोकन गर्न सकिनेछ । दिव्यश्वरी क्षेत्रमा दिव्यश्वरी मन्दिर, कुशल भैरव र नाट्येश्वरी मन्दिर प्रख्यात । चर्चित छन ।

महोत्सवका अर्को आकर्षणको रुपमा नेवाः भ्वय् रहनेछ । नेवा भ्वय् अन्तर्गत परम्परागत शैलीमा सुकुलमा बसेर भोज खान पाइने छ । नेवाः भ्वय्मा सुजँबुजँ भ्वय्, चौरासी ब्यञ्जन भ्वय्को समेत व्यवस्था रहनेछ । महोत्सवमा मध्यपुरमा खेलिने परम्परागत र मौलिक खेलहरु लैलै (घ्वाँय् कासा), खिपःकासा, यकंधाला, घःचाः तुइकेगु, तुतुमाकुचा, ह्वाकरा, पाँयचा, कसि खेलको अवलोकन गर्न पाइने नगर प्रमुख श्रेष्ठले जानकारी दिए ।

यस्तै स्थानीय जीवनशैली र रहनसहन अन्तर्गत महोत्सव अवधीभर टोलटोलमा भजनकीर्तन, पूजाआजाका साथै नेवारी भेषभुषा, बाजागाजा, माटोको भाँडा बनाउने, सेरामिक्स, तरकारी उत्पादन, टिंकी बजीको प्रदर्शनी हुनेछ । साँस्कृतिक कार्यक्रममा धिमेबाजा, बाँसुरी बाजा, दाफा भजन, ज्ञानमाला भजन, लोकदोहरी र स्थानीय तथा राष्ट्रिय कलाकारहरुको प्रस्तुती रहनेछ ।

स्थानीय मौलिक उत्पादनहरुको व्यापारिक प्रदर्शनी अन्तर्गत हस्तकला, टिगिनी बजि (चिउरा), माटोको भाँडाकुँडा, सेरामिक्स, ताजा तरकारी, चाकुवासः, मध्यपुरको मीठो दहि, बिभिन्न प्रकारका बिउबिजन र बोटविरूवा, विभिन्न थरीका गेडागुडी, घरबुना कपडा र यसबाट बनेको लुगाफाटो, पाउँ, गुँदपाक, मरमसला, मुकुण्डो, शुद्ध तोरीको तेललगायत मध्यपुरमा उत्पादन हुने वस्तुको प्रदर्शनी रहने नगर प्रमुख श्रेष्ठले जानकारी दिए ।

## महोत्सवलाई

वितरक व्यवसायीहरुको भेला नगर प्रमुख सुनिल प्रजापतिको प्रमुख आतिथ्यतामा सोमबार सम्पन्न भयो ।

कार्यक्रममा प्रमुख अतिथि प्रजापतिले भक्तपुरलाई महोत्सवमय बनाई बाह्य र आन्तरिक पर्यटकहरुले सोचभन्दा सफा, सम्पदा संरक्षण, शिक्षा-स्वास्थ्यमा फड्को मारेको अनुभव संगालेर जान सक्ने वातावरण तयार गर्नुपर्छ भने । उनले कोरियाली राजदुत भर्खरै आएर भेटमा भक्तपुरमा कोरियाली पर्यटक बढी आउने र भक्तपुर धुमेपछि अरु हेर्न नपर्ने बताएको स्मरण गर्दै नगरपालिकाले सीपमूलक तालिम दिई रहेकोमा कोरियाले कृषिमा व्यवसायिक तालिमको लागि १० रोपनीमा भवन बनाई दिने प्रस्ताव राखेको जानकारी दिए । उनले विभिन्न जनप्रतिनिधि र उच्च पदस्थ व्यक्तिहरु भक्तपुर हेर्न आउँदा यहाँ शिक्षा, स्वास्थ्य, सम्पदा संरक्षण भएको विकासदेखि प्रभावित भएको बताउँदै यहाँ जस्तै उनीहरुको आफ्नो स्थानमा विकास गर्न नसकेकोमा दुखेसो पोखेको बताए । उनले विदेशीको सहयोग विना भक्तपुर विकास गर्न थोरै बजेटमा कसरी भएको भनि अच्चम हुने गरेको बताउँदै भक्तपुर पैसाले नभई जनताको सहयोग र श्रमदानले मात्र सम्भव भएको बताउँछन् । उनले भक्तपुरमा जस्तो अरुले गर्न नसक्नुको कारण अरुले पैसाको लागि मात्र काम गर्दा भएको हो भन्दै भक्तपुर र अरु ठाउँको फरक भनेको भक्तपुर चिन्तनमा धनी, सेवा र श्रमदानमा धनी भएकोले विकास सम्भव भएको त्यसैले भक्तपुरलाई आदरले हेर्ने गरेको बताए । उनले खुसि पैसाले नभई सन्तुष्टिले मात्र सम्भव हुने भएकोले भक्तपुर मै बसी शिक्षा, स्वास्थ्य, रोजगार प्रवर्द्धन, ख्वप अस्पताल, घरदैलो नर्सिङ्ग सेवा, नमुना सरसफाई गरिरहेको र शैक्षिक र व्यवसायीक ऋण समेत दिई रहेको बताए । उनले विश्वविद्यालयको रुपमा महोत्सवलाई अध्ययन र अध्यापन गर्ने थलोको रुपमा विकास गर्नुपर्छ भने । उनले सरसफाईमा चिन्ता व्यक्त गर्दै आफ्नो ठाउँ आफै सफा गरौं भने भावनाले काम गर्न व्यवसायीहरुलाई आव्हान गरे । उनले महोत्सवमा कमिकमजोरी भए त्यसको परिणाम नकारात्मक सन्देश जाने बताउँदै भक्तपुर महोत्सवलाई जनताको महोत्सव, साझा महोत्सव बनाउनु पर्नेमा जोड दिए ।

कार्यक्रम भनपा ३ नं वडाध्यक्ष एवम् कृषि समिति र बजार अनुगमन समितिका संयोजक राजकृष्ण गोराले भक्तपुरमा बसेर कृषि व्यवसाय गरेर जीविको पार्जन गर्ने व्यवसायीहरुले नगरपालिका प्रति जिम्मेवार भई ऐन नियम परिधि भित्र बसेर व्यवसाय गर्न अनुरोध गरे । उनले भक्तपुर महोत्सव नगरपालिकाको लागि नभई नगरबासी र व्यवसायीहरुको आर्थिक र व्यवसायिक प्रवर्द्धनको निम्ति भएको बताए । उनले ५ दिनको महोत्सवले प्रभावित भए वीस बर्षसम्म पनि भक्तपुरमा पर्यटकहरु आउने त्यसले हाम्रो व्यवसाय प्रवर्द्धन र रोजगारी सृजना हुने धारणा व्यक्त गरे । कृषि उत्पादन प्रदर्शनी स्थल पसिखेलमा आ-आफ्नो कृषि उपज उत्पादनको स्टल राख्न र दिन भरि राख्नेलाई रु. ५००।- र अरुलाई न्युन शुल्कमा स्टल बुकिङ्ग गर्न अनुरोध गरे ।

कार्यक्रममा भक्तपुर महोत्सव सचिवालयका गौतम प्रसाद लासिवाले ताइवानको कृषि व्यवसायको अनुभव सुनाउँदै व्यवस्थित महोत्सवमा कृषि उत्पादन प्रदर्शनी नमूना र उदाहरणीय भए हाम्रो पनि अनुभव लिएर जाने सक्ने बताए । उनले भारतबाट आउने कृषि उपजमा विषादी हुने भएकोले उपभोग्य सामान विषादी मुक्त हुनु पर्छ भन्दै महोत्सवबाट पर्यटकीय गन्तव्य स्थल बनाउने टेवा पुग्ने र पर्यटन सेवा शुल्कबाट शिशुस्याहारदेखि कलेज, ख्वप अस्पताल, शैक्षिक ऋण, सम्पदा संरक्षण भई रहेको जानकारी दिए ।

कार्यक्रममा वडा निरिक्षक रामकृष्ण प्रजापतिले कृषिजन्य उत्पादन विक्रिवितरक व्यवसायीहरुले पाँच दिन कृषि उत्पादन प्रदर्शनी स्थल पसिखेलमा स्टल राख्न, महोत्सवमा बाह्य र आन्तरिक पर्यटकको धुईचो बढ्ने भएकोले हिडडूल गर्न सजिलो हुने गरी सडक पेटी र पेटी मुनि सामान नराख्न, उपभोग्य बस्तु माछा, मासु, फलफुल र तरकारीहरु उपभोग गर्न योग्य मात्र बेचबिखन गर्न, पर्यटकहरुलाई नम्र बोली र राम्रो व्यवहार गर्न, सरसफाईमा ध्यान दिन, शान्ति सुव्यवस्था कायम गर्न अनुरोध गरे ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# नेपालभाषाका तीनवटा म्यूजिक भिडियो एकसाथ सार्वजनिक




काठमाडौं । पछिल्लो समय नेपालभाषाका नयाँ म्यूजिक भिडियोहरु निरन्तर सार्वजनिक हुने क्रम जारी छ । यसै क्रममा बिहिवार नेपालभाषाका एक साथ तीन वटा म्यूजिक भिडियो सार्वजनिक भएको छ ।

मतिना इन्टरटेनमेन्टबाट काठमाडौंमा आयोजित एक कार्यक्रममा 'लिक्क लिक्क', ' पानवती मैयाँ' र 'छंगु मतिना' गीतको म्यूजिक भिडियो सार्वजनिक भएको हो । नेपाली चलचित्र क्षेत्रकी आमा भनेर चिनिने 'आमा' चलचित्रमा आमाको भूमिका निर्वाह गर्नुभएकी वरिष्ठ अभिनेत्री चैत्यदेवी सिंहको उपस्थितीमा उक्त म्यूजिक भिडियोहरु सार्वजनिक भएको हो ।

कार्यक्रममा बोल्दै वरिष्ठ अभिनेत्री सिंहले नेपालभाषाको कला क्षेत्रले व्यापकता पाउँदै गएकोमा खुसी व्यक्त गरिन् । वर्तमान समयमा नेपालभाषाको कला क्षेत्रमा महिला कलाकार हरुको साथमा महिला निर्देशक पनि देखिन थालेको भन्दै कलाकार, निर्देशक आराध्यालक्ष्मी खड्गीलाई अगाडी बढ्न शुभकामना दिइन् ।

आयोजकका तर्फबाट बोल्दै निर्देशक, कलाकार खड्गी र कलाकारको साथमा मतिना इन्टरटेनमेन्टका संस्थापक विजयमान सिंहले आफुहरुले निकै मिहिनेत गरेर स्तरीय म्यूजिक भिडियो निर्माण गर्न कोशिश गरेको बताउँदै नेवाः कला र कलाकार क्षेत्रलाई माया गरिदिन अनुरोध गरे ।

कार्यक्रममा वरिष्ठ गायक जुजुकाजी रंजित, वरिष्ठ कलाकार नारायणदेवी प्रधान, राजमति चलचित्रकी राजमति हिसिला महर्जन, वरिष्ठ निर्देशक प्रकाश सायमि, वरिष्ठ सिने पत्रकार विजयरत्न तुलाधर लगायतले आआफ्ना विचार राखेका थिए ।

साथमा 'छंगु मतिना' र ' पानवती मैयाँ' की सह कलाकार सुर्जलक्ष्मी खड्गी र 'छंगु मतिना'का गायक राजकुमार मानन्धरले पनि आफ्ना अनुभव बाँडेका थिए ।

कार्यक्रममा गीत र म्यूजिक भिडियो निर्माणमा योगदान दिने कलाकार, प्राविधिकहरुलाई सम्मान गरिएको थियो । साथमा कलाकार, निर्देशक खड्गीकी हजुरआमा विजुलीमाया खड्गीलाई विशेष सम्मान गरिएको थियो ।

सार्वजनिक गरिएको गीत ' लिक्क लिक्क' को रचना, संगीत डबल शाक्यको रहेको छ भने शाक्य र रत्नशोभा महर्जनले गाएका छन् । आराध्यालक्ष्मी र श्रीकृष्ण खड्गीको अभिनय रहेको छ भने निर्देशन राजेशमान सिंहले गरेका छन् । त्यस्तै आनन्द रत्न बज्राचार्यको रचना र अनिल तुलाधरको संगीत रहेको 'पानवती मैयाँ'मा निशा देसारले आवाज दिएकी छिन् । आराध्यालक्ष्मीले विजयमान सिंहसँग अभिनय गर्नुका साथै म्यूजिक भिडियोको निर्देशन पनि गरेकी छिन् ।

राजकुमार मानन्धरले 'छंगु मतिना' गीतको रचना गरेर संगीत दिनुका साथै गाएका पनि छन् । गायनमा राजकुमारलाई निशा देसारले साथ दिएकी छन्न । यस गीतमा पनि विजयमान सिंह र आराध्यालक्ष्मीले नै अभिनय गरेका छन् भने कोरीयोग्राफी र निर्देशन पनि आराध्याकै रहेको छ ।

तीनवटै म्यूजिक भिडियाको छायाङ्कन र दृश्य सम्पादन सोहन मानन्धरले गरेका छन् । 'छंगु मतिना' को म्यूजिक भिडियो मतिना इन्टरटेनमेन्ट युट्युब च्यानलबाट सार्वजनिक भइसकेको छ । 'पानवती मैयाँ' र 'लिक्क लिक्क' को म्यूजिक भिडियो पनि चाँडै नै मतिना इन्टरटेनमेन्ट युट्युब च्यानलबाटै सार्वजनिक हुने जानकारी निर्देशक, कलाकार आराध्यालक्ष्मीले दिएकी छिन् ।

# '१२ वी फेल' का अभिनेता बिक्रान्तले लिए सन्यास



एजेन्सी । '१२ वी फेल' र 'द साबरमती' जस्ता चलचित्रबाट आफ्नो पहिचान बनाएका अभिनेता विक्रान्त मेसीले अचानक अभिनय क्षेत्रबाट ब्रेक लिने घोषणा गरेका छन् । उनले सामाजिक सञ्जाल मार्फत सो जानकारी दिएका हुन् । यो खबर बाहिर आएसँगै विक्रान्तका फ्यानहरु स्तब्ध र निराश बनेका छन् । कतिपयले उनी अभिनयबाट सधैं टाढै बसेको विश्वास गर्छन् भने कतिपयले ठीक समयमा पुनरागमन गर्ने बताएका छन् ।

विक्रान्तले आफ्नो पोस्टमा लेखेका छन्, 'नमस्कार, पछिल्ला केही वर्ष र त्यसपछिका वर्षहरू अद्भुत छन् । तपाईको निरन्तर सहयोगको लागि म तपाईहरू सबैलाई धन्यवाद दिन्छु, तर म अगाडि बढ्दै जाँदा, मैले महसुस गरेको छु कि यो आफैंलाई पुनः सन्तुलन र घर फर्कने समय हो । पति, बुबा, छोरा र अभिनेताको रूपमा पनि २०२५ मा हामी एकअर्कालाई अन्तिम पटक भेट्नेछौं ।'

विक्रान्तको यो घोषणालाई लिएर चलचित्र उद्योगबाट धेरै प्रतिक्रिया आइरहेका छन् । उनीसँगै फिल्म '१२ वी फेल' मा देखिएकी अभिनेत्री मेधा शंकरले आश्चर्य व्यक्त गरेकी छिन्, 'के ? अभिनेत्री आकांक्षा रञ्जन कपुरले पनि आश्चर्य व्यक्त गरेकी छिन् । उनले कमेन्ट गर्दै लेखे, 'के ??? सोनु, होइन, तपाईं बाँकी रहेका केही कलाकारहरू मध्ये एक हुनुहुन्छ, जो वास्तविक छन् ।'

साबरमती रिपोर्टका क्रममा विक्रान्तलाई धम्की आएको थियो । ब्रेक लिनु अघि विक्रान्तको अन्तिम फिल्म 'द साबरमती रिपोर्ट' हो, जुन १५ नोभेम्बरमा रिलिज भएको थिया े। यो फिल्म गोधरा घटना र त्यसपछिको गुजरात दंगामा आधारित छ । ट्रेलर रिलिज भएसँगै फिल्म विवादमा परेको थियो। चलचित्रका मुख्य कलाकार विक्रान्त मेसीलाई धम्की आएको थियो । विक्रान्त आफैंले बिभिन्न मिडियामा दिएको अन्तर्वार्तामा यसको खुलासा गरेका थिए । विक्रान्तले आफ्ना विरोधीहरूले आफ्नो ९ महिनाको बच्चालाई पनि नछोड्ने र उनीबारे अश्लील कुरा गरेको बताएका थिए । धेरैले यो घटनासँग जोडेर उनले अभिनयवाट सन्यास लिएको अनुमान गरिरहेका छन् ।

# "कार्साङ"ले केही दिनमा टिजर सार्वजनिक गर्दै



काठमाडौं । चलचित्र ' कार्साङ'ले केही दिनमा टिजर सार्वजनिक गर्दैछ । यो चलचित्रको मुख्य भूमिकामा दयाहाङ राई, सिर्जना निङलेखु, जितु नेपाल, दीया मास्केलगायत छन् । हालसम्म निर्माणपक्षले सार्वजनिक गरेको पोस्टर र तस्बिरअनुसार कसको भूमिका के हो भन्ने निश्चित भइसकेको छैन । सबै गाउँले भूमिकामा रहेको पोस्टर र सुटिङ युनिटबाट बाहिरिएको एक तस्बिरले बताएको छ ।

तर निर्माणपक्षले हालसम्म कसको भूमिका कस्तो छ भनेर केही बताएको छैन। सुटिङस्पटबाट बाहिरिएको दयाहाङ र सिर्जना निङलेखुको तस्बिरले दयाहाङ धामीको भूमिकामा छन् कि भन्ने संकेत गरेको थियो ।

यता, जितु र दयाहाङको पोस्टर बराबरी संख्यामा आउँदा को मुख्य भूमिकामा छन् भन्ने झनै अन्योल देखिएको छ । क्यारेक्टरको लुक्सबाट को प्रमुख भूमिकामा छन् भनेर अनुमान लगाउन सकिने ठाउँ छैन । यदि दयाहाङ राई मुख्य भूमिकामा छन् भने धामी बस्ने क्यारेक्टर पनि हिरो हुन्छ भन्ने यो चलचित्रले प्रमाणित गर्नेछ । चरित्र अभिनेताहरू हिरो हुने सिनेमा आउन थालेको त धेरै भइसक्यो ।

तर, 'कार्साङ'मा धामी बस्दै हिँड्ने क्यारेक्टर नै हिरो छ भने नेपाली टिपिकल क्यारेक्टरमा सिनेमा बन्न थालेछन् पुष्टि हुनेछ। यसले पैसावाल धनी र हेर्दा आकर्षक क्यारेक्टर मात्रै हुँदैनन् । थप भुइँमान्छेका कथामा चलचित्र बन्न थालेको 'कार्साङ'ले पुष्टि गरेको छ । यम शेर्पाको डेब्यु लेखन तथा निर्देशनमा निर्माण भएको सिनेमा 'कार्साङ' पुस २६ गते पदर्शन हुँदैछ ।

शेर्पा समुदायको संस्कृतिमा आधारित भएर बनेको चलचित्रमा अभिनेता दयाहाङ राई, डेब्यु अभिनेत्री सिर्जना निङलेखु, जितु नेपाल, दीया मास्के, बुद्धि तामाङ, सृष्टि गौतम, डोमा ह्योल्मो, प्रेम लोप्चन, सुरवीर पण्डितलगायतको अभिनय छ ।

यार्सा फिल्म्स र पुरुषोत्तम प्रधान फिल्मसको संयुक्त प्रस्तुतिमा निर्माण भएको सिनेमाका पुरुषोत्तम प्रधानको छायांकार र निर्माता स्वयंम हुन् । सिनेमाको सह-निर्मातामा गोविन्द बोहरा, कार्यकारी निर्माता आङछिरिङ शेर्पा तथा लाइन प्रोड्युसर वीरेन्द्र शाही छन् ।

यो चलचित्रको अन्तर्राष्ट्रिय वितरक अधिकार हुल्या इभेन्टस सुमन पराजुली र सोमलाल थोकर लिएको छन् भने देशभर वितरणको जिम्मेवारी आरआर फिल्मसले लिएको छ ।

# फेस अफ क्लासिक डाइमन्ड २०२४ को विजेता घोषणा




काठमाडौं । नेपालकै चर्चित गहना ब्रान्ड क्लासिक डाइमन्ड ज्वेलर्सले आयोजना गर्ने फेसन र मोडलिङ प्रतियोगिता 'फेस अफ क्लासिक डाइमन्ड'को पाँचौं सिजनको विजेता घोषणा गरिएको छ ।

आइतबार सम्पन्न ग्रान्ड फिनालेमा पूर्णिका सिजापति 'फेस अफ क्लासिक डाइमन्ड २०२४' को विजेता घोषित भएकी छन् । फस्ट रनरअप स्मृति श्रेष्ठ र सेकेन्ड रनरअप उरुषा भण्डारी बनेका छन् । स्मृति श्रेष्ठले प्रतियोगिताको उत्कृष्ट वाकको उपाधि जितिन् भने सुबुना थापाले 'मोस्ट पपुलर दुलही'को उपाधि जित्न सफल भइन् ।

विजेताले १ लाख ५० हजार नगदसहित एक वर्षका लागि क्लासिक डाइमन्डको ब्रान्ड एम्बेसडर बन्ने अवसर प्राप्त गर्नेछन् । फस्ट रनरअपले १ लाख रुपैयाँ र सेकेन्ड रनरअपले ५० हजार रुपैयाँ प्राप्त गरेका छन् । विजेताहरूले क्लासिक डाइमन्डको विभिन्न परियोजनामा काम गर्ने अवसर पनि पाउनेछन् ।

क्लासिक डाइमन्डको ग्रान्ड फेशन र ज्वेलरी शो आगामी ४ र ५ माघमा काठमाडौंमा आयोजना हुनेछ । सोही कार्यक्रममा विजेताहरूलाई सम्मान र पुरस्कार प्रदान गरिनेछ ।

देशभरका विभिन्न क्षेत्रबाट अडिसनमार्फत छानिएका २६ मोडललाई करिब एक महिना तालिम दिएर प्रतियोगितामा सहभागी गराइएको थियो । उनीहरूमध्ये उत्कृष्ट पाँचलाई फाइनलका लागि छनोट गरी विजेताहरू घोषणा गरिएको हो । प्रतियोगिताको निर्णायक प्यानलमा पूर्व मिस नेपाल माल्भिका सुब्बा, पूर्व मिस नेपाल अस्मी श्रेष्ठ, अन्तर्राष्ट्रिय मोडल सविता कार्की, भारतीय सुपर मोडल दीप्ती गुजराल र कोरियोग्राफर रेहान शाह रहेका थिए । प्रतियोगिताको कोरियोग्राफी रेहान शाहले गरेका थिए ।

क्लासिक डाइमन्डका अध्यक्ष बाबु राजा महर्जनका अनुसार यो प्रतियोगिता नेपालका फेशन र मोडलिङ क्षेत्रमा नयाँ प्रतिभा भित्र्याउन र तिनलाई राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा स्थापित गराउन योगदान पुऱ्याउँदै आएको छ । यसअघि साम्राज्ञी राज्यलक्ष्मी शाह, अञ्जली लाम, र मुना गौचनजस्ता प्रतिभाहरूले यो प्रतियोगिताबाट आफ्नो करियरलाई उच्च स्थानमा पुऱ्याएका थिए । प्रतियोगिताले नेपाली मोडलिङ क्षेत्रलाई प्रवर्द्धन गर्दै अन्तर्राष्ट्रिय स्तरमा प्रतिस्पर्धा गर्न योग्य बनाउने उद्देश्य राखेको आयोजकले बताएको छ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/






जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३




# थिमि टाइम्स

**THIMI TIMES WEEKLY** साप्ताहिक




वर्ष १८ अङ्क १९ ने.सं. ११४५ थिंलाथ्व एकादशी मंसीर २६ गते बुधबार, २०८१ 11 Dec. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–


## संसद् अधिवेशन प्रति सत्तारुढ दलका सांसदहरूको चासो कम !

काठमाडौं । संविधानसभाबाट नयाँ संविधान निर्माण भएर कार्यान्वयनको चरणमा अघि बढेको एक दशक भइसकेको छ । साथै सरकारका तीनै तहको दुई पटक निर्वाचन सम्पन्न भएर दोस्रो कार्यकाल सकिन अब मात्र २ वर्ष बाँकी रहेको छ र अर्को निर्वाचन २०८४ मा हुने छ । यस बीच देशमा सरकार परिवर्तनले देश अस्तिरता तर्फ धकेलिएको आंकलन गरिएको छ । देशको केन्द्रिय सरकारमा हुने परिवर्तनसँगै प्रदेशमा पनि यस दुई कार्यकालमा दजनौं पटक सरकार परिवर्तन भइसकेको छ । जसको कारण पनि देशमा अस्थिरताले प्रशय पाएको राजनीतिक वृतमा चर्चा हुने गरको छ ।

यसै बीच अहिलेसम्म संविधान र संघीयताको पूर्ण कार्यान्वयनका लागि आवश्यक दजनौं ऐन-कानुन निर्माण तथा संशोधन हुन अझै बाँकी रहेको छ । अहिले पनि विगत राजतन्त्र कालकै ऐन कानुनहरु देशमा क्रियाशील रहेको छ । राष्ट्रियसभाको विधायन समितिले संघीयता कार्यान्वयनका लागि निर्माण गर्नुपर्ने कानुनको सूची नै तयार पारेर संसद्बाट पारित गरेको छ। 'संविधानअनुसार बन्न बाँकी कानुनहरूको अध्ययन प्रतिवेदन'लाई विधायन



व्यवस्थापन समितिले २०८० जेठमा पारित गरेको थियो ।

'संवैधानिक प्रावधान कार्यान्वयन गर्न आधारभूत रूपमा संघले १५१, प्रदेशले २४ र स्थानीय तहले ६ वटा कानुन बनाउनुपर्नेमा संघको क्षेत्राधिकारका १५१ मध्ये ४० वटा कानुन जारी हुन बाँकी रहेको उक्त प्रतिवेदनले औंल्याएको थियो ।

समितिको अध्ययनअनुसार संविधान कार्यान्वयनका लागि मूलतः संघीय निजामती ऐन, संघीय शिक्षा ऐन, जनस्वास्थ्य ऐन, एकीकृत न्याय प्रणालीसम्बन्धी कानुन (प्रदेश न्याय सेवा आयोगको आवश्यकता, प्रयोजन र औचित्य स्पष्ट हुने गरी), नेपाल प्रहरी कानुनमा सुधार, सञ्चारको हकसम्बन्धी एकीकृत कानुन, सम्पत्तिको हक, अधिग्रहण र क्षतिपूर्तिसम्बन्धी विषयमा एकीकृत कानुन, महिलाको हकसम्बन्धी कानुन, संवैधानिक इजलास, प्रदेश प्रमुखको अधिकार र अधिकारको प्रयोगसम्बन्धी कानुन, करसम्बन्धी दोहोरोपना अन्त्य गर्ने कानुनलगायत बन्न बाँकी छन् ।

यो प्रतिवेदन सार्वजनिक भएपछि २ वटा कानुन भने बनिसकेका छन् । यद्यपि बनेकै कानुन पनि कार्यान्वयनमा आउन सकेका छैनन् । सभामुख देवराज घिमिरे कानुन निर्माण एवं संशोधनमा भएको ढिलाइप्रति सांसदहरू कै दोष देख्छन् । १८औं संसद् सेवा दिवसको अवसरमा २३ मंसिरमा आयोजित कार्यक्रममा उनले सरकारको मुख ताक्ने सांसदहरूको प्रवृत्तिका कारण कानुन नबनेको धारणा व्यक्त गरे ।

सभामुख घिमिरेले संविधान जारी नभएको र मुलुक संघीयतामा नगएको अवस्थामा बनेको कानुनमै टेकेर संसद् चलाउनुपरेको उल्लेख गर्दै उक्त कानुनलाई समयसापेक्ष बनाउनुपर्ने माग गरे । 'हाम्रो कानुन हामीले बनाउनुपर्छ भन्ने होइन, सरकारले कानुन कहिले ल्याइदिन्छ भनेर हेर्ने प्रवृत्ति संसद्भित्र छ', उनको भनाइ थियो, '१८ वर्षअघि बनाएको कानून समयसापेक्ष बनाएर जानुपर्ने कुरा धेरै महत्त्वपूर्ण छ । यसमा हाम्रो ध्यान गइरहेको छैन ।'

अघिल्लो हिउँदे अधिवेशनमा प्रधानमन्त्रीले नै निर्देशन दिएपछि कानुन मन्त्रालयले अन्य मन्त्रालयसँग समन्वय गरेर बनाउनुपर्ने र संशोधन गर्नुपर्ने कानुनको प्रस्ताव सूची मागेको थियो । त्यस वेला कुल ११७ वटा विषयमा कानुन निर्माण तथा संशोधनका लागि प्रस्ताव आएको थियो ।

ती विधेयकलाई प्राथमिकता क्रम निर्धारण गरेर हिउँदे अधिवेशनका लागि पहिलो प्राथमिकतामा परेका ६३ वटा विधेयकलाई सरकारले अघि सारेको थियो । वर्तमान सरकारको भने त्यसतर्फ ध्यान पुगेकै देखिँदैन । कानुन मन्त्रालयका उपसचिव प्रकाश न्यौपाने विधेयकहरू पाइपलाइनमा भए पनि विगतमा जस्तो प्राथमिकीकरण नगरिएको बताउँछन् । यद्यपि निर्माण एवं संशोधन गर्नुपर्ने ऐन कानुनहरूबारे प्रस्ताव भने आइरहेको बताउँछन् ।

'अहिले यति नै विधेयक जाने भनेर टुंगो लागेको छैन । पहिलो

**बाँकी पेज ७ मा**

## चौतारी र युनियन तथा युनियनको विद्रोही र प्रेस सेन्टरबीच चुनावी गठबन्धन




काठमाडौं । नेपाल पत्रकार महासंघको मंसिर २८ गते हुने महाधिवेशनका लागि नेपाली कांग्रेसनिकट प्रेस युनियन र एमालेनिकट प्रेस चौतारीले गठबन्धन गरेर साझा उम्मेदवारी दर्ता गरेका छन्।

पत्रकार महासंघको १३ सदस्यीय पदाधिकारी र विभिन्न तहका संरचनाका लागि दुई संस्थाबीच पद बाँडफाँट भएको हो।

गठबन्धनले अध्यक्षमा प्रेस चौतारीकी निर्मला शर्मालाई अघि सारेको छ। महिला उपाध्यक्षमा नितु पण्डित, कोषाध्यक्षमा रामकृष्ण ज्ञवाली, समावेशी सचिवमा सविन प्रियासन रहेका छन्। प्रेस युनियनबाट वरिष्ठ उपाध्यक्षमा, दीपक आचार्य, समावेशी उपाध्यक्षमा उमिद बागचन्द, महासचिवमा रामप्रसाद दाहाल रहेका छन्।

यस्तै, सचिवमा रमेश खतिवडा, सोनी शर्मा, प्रकाश धौलाकोटी, बैकुण्ठ पराजुली र अशोक तिवारी

**बाँकी पेज ७ मा**

## भक्तपुरका टोलटोलहरु महोत्सवमय हुने




भक्तपुर । यही मंसिर २८ गतेदेखि पुस २ गते पाँचदिन सम्म सञ्चालन हुने भक्तपुर महोत्सव २०८१ को क्रममा भक्तपुरको महेश्वरी खेल मैदानमा व्यापार मेला पनि हुने भएको छ । मेलाबारे जानकारी दिन बुधबार आयोजित पत्रकार सम्मेलनमा भक्तपुर महोत्सव सुरु हुने दिन मंसिर २८ बाट नै मेला पनि सुरु हुने जनाइयो ।

पत्रकार सम्मेलनमा मेला आयोजक भक्तपुर युवा टिम गोल्मढी भक्तपुरका अध्यक्ष केशव त्वानाबासूले मेला

**बाँकी पेज ६ मा**

## मध्यपुर महोत्सवमा कहाँ के हेर्न पाइन्छ !

पर्यटन विकासको लागि
मध्यपुर महोत्सव २०८१
पुष १२, १३ र १४ गते
ने.सं. ११४५ थिलागा: १२, १३ र १४
Explore, Experience, Enjoy!
मुख्य पुरातात्विक स्मारक क्षेत्रहरू
TEMPLES
क्वलाखु अजिमा (बालकुमारी) परिसर, लोकेश्वर मन्दिर परिसर, थिमि लायकू परिसर, सिवाः परिसर, दिगू परिसर, इनायक्व (सिद्धिकाली) परिसर, पाटीविहार परिसर, न्यागाः परिसर, लाछि (सिद्धिगणेश) परिसर, पाचो तथा बोदे लायकू परिसर, पलिस्वां पुखू तथा कालिका मन्दिर परिसर, विष्णुघाः परिसर, भांगु (महालक्ष्मी) परिसर, तधांटोल परिसर, नीलबाराही मन्दिर परिसर आदि

भक्तपुर । नेपालकै पुरानो र मौलिक शहरको रुपमा परिचय पाएको भक्तपुर नगरमा यही २८ गते देखि ५ दिन सम्म भक्तपुर महोत्सवको आयोजना हुन गइरहेको छ। सो महोत्सव सकिए लगतै भक्तपुर नगरपालिकासँगै जोडिएको अर्को नेवा वस्तीको रुपमा रहेको मध्यपुर थिमि नगरपालिकामा पुसको १२, १३ र १४ गते ३ दिने महोत्सव शुरु हुन लागेको छ । सो महोत्सवमा नेवा वस्तीमा रहेको मौलिक जनजीवनका साथै नेवा कला, संस्कृति, र नेवा वस्तीका मौलिक संरचनाहरुको साथमा मूर्त तथा अमूर्त कलाहरुको महोतविमा पर्दशन हुने नगर प्रमुख सुरेन्द्र श्रेष्ठले शुक्रबार नेपाल प्रेस सोसाइटीले आयोजना गरिएको मध्यपुर महोत्सव विशेष अन्तरक्रिया कार्यक्रममा जानकारी दिएका छन् । साथै उनले मध्यपुर महोत्सवमा अवधिकम निःशुल्क यातायात संचालन गरिने पनि जानकारी दिएका छन् ।

मध्यपुर महोत्सवका संयोजकसमेत रहेका श्रेष्ठले महोत्सव अवधिभरका लागि १५/२० वटा गाडी निःशुल्क संचालन गरिने जनाए । उनले भने, "महोत्सवमा १५/२० वटा फ्री भेहिकलको व्यवस्था गरेका छौं । साढे पाँच किलोमिटरको क्षेत्रमा संचालन हुने महोत्सव अवलोकन गर्न सहज होस् भन्ने हेतुले निःशुल्क यातायातको व्यवस्था गरिएको हो । र यो गाडीले महोत्सव क्षेत्रमा निःशुल्क संचालन गर्ने व्यवस्था गरेका छौं ।"

महोत्सवको मूल उद्देश्य मध्यपुरलाई नयाँ पर्यटकीय गन्तव्यको रुपमा विकास गरी दीर्घकालिन रूपमा नगर र नगरबासीको आर्थिक समृद्धिमा टेवा पुर्याउनु रहेको नगर प्रमुख श्रेष्ठले बताए। उनका अनुसार नगरको स्थानीय कला, संस्कृति र सम्पदाको प्रदर्शन गर्ने, स्थानीय मौलिक पेशा, परिकार र उत्पादनको प्रवर्द्धन गर्ने, मध्यपुरलाई पर्यटकीय गन्तव्यको रूपमा परिचित गराउने र समय समयमा हुने ऐतिहासिक जात्रा पर्वहरूको विषयमा जानकारी

**बाँकी पेज ७ मा**

## ऋण तथा बचत सहकारीमा समस्या : बचत सुरक्षण गर्ने कि खारेज ?

नारायण अर्याल

काठमाडौं - पछिल्लो केही वर्षयता बचत तथा ऋण र बहुउद्देश्यीय सहकारीका नाममा सञ्चालन हुँदै आएका सयौं सहकारीहरूमा बचत अपचलन समस्या देखिएको छ । दर्जनौं सहकारी सञ्चालकविरुद्ध मुद्दा दायर गर्ने, अपचलनकर्तालाई हिरासतमा राख्ने र अनुसन्धान गर्ने क्रम पनि चलेको छ ।

सदस्यहरूको स्वःनियमको आदर्शमा सञ्चालन हुने सहकारी संस्था निश्चित गलत उद्देश्य राखेका व्यक्तिले सञ्चालन गर्ने र अपरिचित हजारौं व्यक्तिहरू त्यसमा जोडिन पुग्ने हुँदा ठूलो मात्रामा अपचलनको अवस्था सिर्जना भएको केही विज्ञको धारणा छ ।

यो समस्या बढ्दै जाँदा विशेषगरी शहरी क्षेत्रमा सञ्चालित सहकारीहरूको अस्तित्वमै सङ्कट पैदा हुनसक्ने अनुमान हुन थालेको छ । लाखौं सदस्य तथा बचतकर्ताहरू समस्यामा परेका छन् ।

बचत तथा ऋण सहकारी क्षेत्र खारेज गरेर अघि बढ्ने कि बचत सुरक्षाका लागि कानुनी व्यवस्था थप बलियो बनाउने ? यो प्रश्न नीतिनिर्माता र सहकारी अभियानकर्मीतर्फ सोझिएको छ ।

खर्ब हाराहारीमा बचत अपचलन, शहरी क्षेत्रमा समस्या

सहकारी महासंघको तथ्याङ्क अनुसार नेपालमा हाल २९ हजार ८८६ वटा सहकारी सञ्चालनमा छन् ।

प्रतिनिधि सभाका सदस्य सूर्य थापाको नेतृत्वमा बनेको 'सहकारी संस्था बचत रकम दुरुपयोगसम्बन्धी विशेष छानबिन समिति'ले तयार गरेको प्रतिवेदनले संघीय, प्रदेश र स्थानीय तहको नियमन क्षेत्रभित्र रहेका विभिन्न ४० वटा सहकारी संस्थाले बचतकर्ताको ८७ अर्ब रुपैयाँभन्दा बढी बचत अपचलन गरेको देखाएको छ ।

त्यस्तै, संघीय तहको समस्याग्रस्त सहकारी व्यवस्थापन समितिको कार्यालयले पनि पछिल्लो समयसम्म २२ वटा सहकारी समस्याग्रस्त भएको देखाएको छ । ती सहकारीहरूमा ६२ हजार ७६० बचतकर्ताको रकम रहेको तथ्याङ्कमा उल्लेख छ ।

ती दुवै समितिले औंल्याएका बाहेक पनि प्रदेश सरकार र स्थानीय सरकारको नियमन क्षेत्रभित्र सञ्चालनमा रहेका अन्य सयौं सहकारीले लाखौं बचतकर्ताको खर्ब रुपैयाँभन्दा बढी बचत अपचलन गरेको देखिन्छ ।

बचत अपचलनको मुख्य समस्या शहरी क्षेत्रमै छ । सो समस्या पनि बैंकिङ व्यवसायको उद्धेश्यले बचत तथा ऋणको

**बाँकी पेज ७ मा**












# राष्ट्रिय स्तरको कोडिङ प्रतियोगिता सम्पन्न



काठमाडौं । कक्षा २ देखि ९ सम्मका विद्यार्थीलाई लक्षित गरी आयोजित राष्ट्रिय स्तरको कोडिङ प्रतियोगिताको दोस्रो चरण भव्य रूपमा सम्पन्न भएको छ । नेपालको अग्रणी आईटी तालिम प्रदायक दूरशिक्षाले डिस्कभरी एजुकेसन नेटवर्क यूके र एडुटेकको सहकार्यमा आयोजना गरेको यस चरणमा ८० विद्यार्थीले भौतिक रूपमा उपस्थित भई प्रतिस्पर्धा गरेका थिए, जसमध्ये विभिन्न विधाबाट ९ जना विद्यार्थी फेब्रुअरी २०२५ मा यूकेमा हुने ग्लोबल कम्पिटिसनका लागि छनोट भएका छन् ।

ग्लोबल कम्पिटिसनमा छानिएका नेपाली विद्यार्थीहरूले अब भारत, हङकङ, मिडल इस्ट, यूके, अमेरिका, अष्ट्रेलिया लगायत देशका सहभागीसँग प्रतिस्पर्धा गर्नेछन् ।

दोस्रो चरणको कोडिङ प्रतियोगिताको उद्घाटन सूचना प्रविधिविज्ञ डा. राजीव पाण्डे सुब्बाले गरेका थिए । उनले यस प्रतियोगिताले बालबालिकाको तार्किक सोच, समस्या समाधान क्षमता र डिजिटल सीपलाई प्रोत्साहित गर्ने विश्वास व्यक्त गरे ।

४०० भन्दा बढी विद्यार्थीले अनलाइनबाट परियोजना पठाएकोमा भौतिक प्रतिस्पर्धामा ८० जना छानिएका थिए । यस चरणमा विद्यार्थीहरूले अत्यन्तै प्रभावकारी प्रोजेक्ट तयार पारेको दूरशिक्षाका प्रमुख कार्यकारी अधिकृत कृष्ण पाण्डेले बताए । "यो प्रतियोगिताले सहभागीहरूलाई आफ्नो कोडिङ सीप सुधार्न र समस्याहरूको समाधान गर्ने कुशलता अभिवृद्धि गर्न मद्दत पुऱ्याएको भने उत्कृष्ट प्रतियोगीलाई विश्वमञ्चमा प्रतिस्पर्धा गर्ने अवसर प्रदान गरेको छ," उनले भने ।

यस प्रतियोगितामा कक्षा २ देखि ४ का विद्यार्थीहरूले जुनियर ब्लक-आधारित कोडिङ, कक्षा ५ का विद्यार्थीहरूले सिनियर ब्लक-आधारित कोडिङ र कक्षा ६ देखि ९ सम्मका विद्यार्थीहरूले पाइथनमा आधारित रही विभिन्न थिममा प्रोजेक्ट तयार गरेका थिए । कार्यक्रममा 'गर्ल्स हु कोड' अभियान समेत सञ्चालन गरिएको थियो, जसले छात्राहरूको सहभागिता अभूतपूर्व रूपमा बढाएको आईसीटी फ्रेमकी अध्यक्ष मिना अर्यालले बताइन् । उनका अनुसार दोस्रो चरणको प्रतिस्पर्धामा ५० प्रतिशतभन्दा बढी छात्राहरूको उपस्थिति रहेको थियो ।

प्रतियोगिताले बालबालिकाको समस्या समाधान, रचनात्मकता र डिजिटल साक्षरताको विकासमा ठूलो योगदान दिएको भन्दै अभिभावकहरूले पनि खुशी व्यक्त गरेका छन् । "हाम्रो बच्चाले यस्तो ठूलो मञ्चमा आफ्नो क्षमता प्रदर्शन गर्न पाउँदा गर्व लागेको छ । दूरशिक्षाले यस्तो अवसर प्रदान गरेकोमा धन्यवाद छ," एक अभिभावकले भने ।

बालबालिकाको डिजिटल सीपको विकास गर्न र प्रविधिमा करियर सुरु गर्ने अवसर दिन यो प्रतियोगिता महत्त्वपूर्ण हुने आयोजकको विश्वास छ ।

ग्लोबल प्रतिस्पर्धामा चयन भएका विद्यार्थीहरू यस प्रकार छन्:

Python Category (Grade 6-9):

1. Saral Thapaliya – Reliance International Academy, Budhanilkantha, Kathmandu
2. Romeo Adhikari – Shree Bhachchek Secondary School, Gorkha, Gorkha
3. Ansu Rijal – GEMS School, Dhapakhel, Lalitpur

Senior Category – Block Coding (Grade 5):

1. Shreyash Khadgi – Meridian International School, Baluwatar, Kathmandu
2. Sarwagya Gurung – John Dewey School, Kapan, Kathmandu
3. Shubham Ghimire – Rosebud School, Rudramati Marg, Kathmandu

Junior Category – Block Coding (Grade 2-4):

1. Sushovan Ghimire – Meridian International School, Baluwatar, Kathmandu
2. Yukita Maharjan – John Dewey School, Kapan, Kathmandu
3. Binayak Pangeni – The Excelsior School, Swyambhu, Kathmandu

# सहयोगी साकोसमा नयाँ नेतृत्व चयन



भक्तपुर । मध्यपुर थिमिको बालकुमारीमा रहेको सहयोगी बचत तथा सेवा केन्द्र सहकारी संस्था लिमिटेडको १९ औं वार्षिक साधारणसभाबाट संस्थाका अध्यक्ष रामकृष्ण श्रेष्ठको सभापतित्वम सम्पन्न भएको छ । कार्यक्रम संस्थाका जेष्ठ सदस्य हेरा बहादुर तामस श्रेष्ठले पानसमा दिप प्रज्वलन गरी उद्घाटन गरेको कार्यक्रममा भक्तपुर जिल्ला सहकारी संघका विरेन्द्रभक्त प्रधानाङ्ग, जिल्ला बचत संघ भक्तपुरका बालकृष्ण ध्वजु, मध्यपुर थिमि सहकारी शाखा प्रमुख अभयन्द्र रञ्जित, बालकुमारी सहकारीका सचिव पृथ्वीराम श्रेष्ठलगायतका अतिथिहरुले शुभकामना मन्तव्य व्यक्त गरेको थियो ।

कार्यक्रममा संस्थाका अध्यक्षबाट वार्षिक प्रतिवेदन प्रस्तुत गर्दै १७ सय १ जना सदस्यबाट शेयर पुँजी १ करोड ५२ लाख ३४ हजार ६ सय रुपैंया पुगेको जानकारी दिए । संस्थाका कोषाध्यक्ष प्रदिप श्रेष्ठले आ.व.२०८०/०८१ मा ६ लाख ८५ हजार ६ सय खुद बचत भएको तथ्य प्रस्तुत गर्दै आर्थिक प्रतिवेदन प्रस्तुत गरेको थियो । संस्थाका उपाध्यक्ष सुवर्णभक्त श्रेष्ठले सहजिकरण गरेको कार्यक्रममा संस्थाका संचालक सदस्य केशवरचरण श्रेष्ठले संस्थाले ३ सय ६५ दिन नै सदस्यहरुलाई सेवा दिएको जानकारी दिदैं स्वागत मन्तव्य व्यक्त गरेको थियो । जेष्ठ शेयर सदस्य हेरा बहादुर तामस श्रेष्ठलाई सम्मानपत्रसहित सहयोगी जेष्ठ सदस्य सम्मान प्रदान गरिएको कार्यक्रममा गतवर्षको एसईई परीक्षामा उच्च अंक प्राप्त गरेका ४ जना छात्रछात्रालाई नगद सहित सहयोगी शैक्षिक सम्मान प्रदान गरिएको थियो । शंखधर बैंक्वेटमा भएको उक्त १९ औं साधारणसभाबाट आगामी ४ वर्षका लागि नयाँ कार्यसमितिसमेत चयन भएको छ ।

आगामि ४ वर्षका लागि चन्द्रकृष्ण (गोपाल) श्रेष्ठको अध्यक्षतामा ७ सदस्यीय संचालक समिति निर्विरोध चयन भएको छ । जसमा संचालक उपाध्यक्षमा जीवन श्रेष्ठ, सचिवमा सुवर्णभक्त श्रेष्ठ, कोषाध्यक्षमा प्रदिप श्रेष्ठ र सचिवमा सुवर्णभक्त श्रेष्ठ सर्वसम्मत चयन भएको छ भने ७ सदस्यीय संचालक समितिको सदस्यहरुमा रामकृष्ण श्रेष्ठ, केशवचरण श्रेष्ठ र रामकेशरी श्रेष्ठ निविरोध निर्वाचित भएको छ । त्यस्तै लेखा संयोजकमा जोतिष श्रेष्ठ र सदस्यद्धयमा सजनी श्रेष्ठ र रेनु श्रेष्ठ रहको नवनिर्वाचित संचालक अध्यक्ष श्रेष्ठालले जानकारी दिएको छ ।

# पुरानो पार्टीले देश विगार्यो : रास्वपा प्रमुख सचेतक परियार

भक्तपुर । राष्ट्रिय स्वतन्त्र पार्टीका प्रमुख सचेतक सन्तोष परियारले अहिलेका मुख्य राजनीतिक दलले देश बिगारेको आरोप लगाउनुभएको छ । भक्तपुरको मध्यपुर थिमिमा सम्पन्न भएको प्रथम जिल्ला भेलालाई सम्बोधन गर्ने क्रममा परियारले नेपाली कांग्रेस, नेकपा एमाले लगायतका दल सिद्धान्त बमोजिम नचलेको हुनाले देश अहिलेको अवस्थामा पुगेको बताउनु भएको हो । 'नेपाली कांग्रेसका संस्थापक नेता विपी कोइरालाले देखाएको बाटो हिँडेको भए नेपाली युवाहरु बेरोजगार भएर विदेशिनु पर्ने थिएन । मदन भण्डारीले देखाएको जनताको बहुदलीय जनवाद (जबज) नेकपा एमालेले लागू गरेको भए नेपालमा कुशासन, भ्रष्टाचार र विकृतिले जरो गाड्ने थिएन ।' परियारको तर्क थियो । पुरानो दलले सिद्धान्ततः काम नगरेको भएर प्राकृतिक नियम बमोजिम नेपालमा वैकल्पिक शक्तिको रुपमा नातावाद, कृपावाद र परिवारवाद भन्दा माथि उठेर रास्वपा अस्तित्वमा आएको उहाँको दाबी छ ।

त्यस्तै, रास्वपाका केन्द्रीय उपसभापति तथा पूर्वमन्त्री डिपी अर्यालले नेपालमा वैकल्पिक राजनीतिक शक्ति र नयाँ सोच भएका युवाहरुलाई प्रहार भइरहेकोमा सचेत हुन आग्रह गर्नुभयो । पार्टी सभापति रवि लामिछानेलाई सरकारले राजनीतिक प्रतिशोधको लागि अनावश्यक रुपमा दुःख दिएको उहाँको आरोप थियो ।

थिमिको निगुपुखू (दुईपोखरी) क्षेत्रमा सम्पन्न भएको कार्यक्रममा संसदीय दलका उपनेता तथा पूर्वमन्त्री विराजभक्त श्रेष्ठले पार्टीका नेता कार्यकर्ताहरु ढुङ्गामुढा नगरिकन राजनीतिमा आएको बताउनुभयो । पार्टी सभापतिलाई सरकारले साँधेको प्रतिशोधप्रति सचेत रहन आह्वान गर्दै निरन्तर शान्तिपूर्ण बाटोमार्फत भ्रष्टाचार र कुशासनको विरोध गर्न श्रेष्ठले आग्रह गर्नुभयो ।

कार्यक्रममा संस्कृति, सामाजिक र साहित्यिक क्षेत्रमा योगदान गरेका गणेशराम लाछि र जिवित सांस्कृतिक धरोहर श्रीगोपाल प्रजापतिलाई सम्मान गरिएको थियो । रुकेश रंजितले सञ्चालन गरेको उद्घाटन सत्रमा रास्वपा मध्यपुर थिमि नगर सभापति न्हुछेरत्न मानन्धर, प्रमिला कुलुजु, कुशुम महर्जन तथा रामेश्वर बस्नेत लगायतका नेताहरुले सम्बोधन गर्नुभएको थियो । शंखधर चोकबाट ऱ्याली गरेर निगुपुखू क्षेत्र पुगेर सम्पन्न गरेको जिल्ला भेलाको उद्घाटन पश्चात् सुरु हुने बन्दसत्रले राष्ट्रिय स्वतन्त्र पार्टी भक्तपुर जिल्लाको नयाँ कार्यसमिति चयन गर्नेछ ।

# नेशनल चेम्बर अफ एग्रिकल्चर जापानको रोजगार परामर्श सेमिनार




काठमाण्डौं । नेशनल चेम्बर अफ एग्रिकल्चर (जापान) ले जापानमा कृषि क्षेत्रमा काम गर्न जाने युवाहरुका लागि लक्षित गर्दै परामर्श सेवा प्रदान गर्ने भएको छ । ललितपुरको होटल हिमालयनमा शनिवार संस्थाले जापान आउने जानकारी त्यहाँ आउने तरिका तथा शर्त लगायत कानुनी प्रक्रिया र जापानका कृषि व्यवसायीहरुसँग व्यक्तिगत रुपमा परिचय तथा साक्षात्कारसहित नेपाल र जापानका सरोकारवालाहरुबीच पारस्परिक सम्बन्ध विकास गर्ने उदेश्यले 'रोजगार परामर्श सेमिनार-२०२४'आयोजना गर्न लागेको हो ।

सेमिनारको उद्घाटन बागमती प्रदेशका श्रम, रोजगार तथा यातायात मन्त्री प्रेमभक्त महर्जनले गर्ने छ । ललितपुरमा हुने सेमिनारमा २ सय जना प्रत्यक्ष सहभागी हुने र नेपाल जापान र अन्य मुलुकबाट भने जुम माध्यममा सयौंको संख्यामा सहभागी हुने नेशनल चेम्बर अफ एग्रिकल्चर (जापान) नेपाल प्रतिनिधि डा.अनोज शाक्यले जानकारी दिए । 'जापानमा घटदो जन्मदर र श्रमशक्तिका कारण विदेशी जनशक्ति (कामदार) कृषिमा मात्र नभई अन्य क्षेत्रमा पनि बढदै गएको छ । नेपाली युवा अस्थायी कामदारका रूपमा मात्र जापान जान चाहन्छन् तर त्यहाँ कसरी जाने, के गर्ने भन्ने बारेमा अन्यौल छन् तसर्थ त्यो अन्यौलतालाई हटाउन र जापान र नेपालबीचको युवा जनशक्तिको निर्माणमा यस सेमिनार एउटा पुल बन्न सक्ने भएकोले यो सेमिनार आयोजना गरिएको हो,' डा. शाक्यले भने ।

नेपालबाट जापानमा उचित रूपमा शिक्षित जनशक्ति पठाउन आवश्यक छ र नेपालको कृषि क्षेत्रको भविष्यलाई अगाडि बढाउन हाम्रो युवा जनशक्तिले ठूलो भूमिका खेल्नेछ भन्ने विश्वासका साथ नेपालले उत्कृष्ट मानव संसाधन वा भनौं दक्ष जनशक्ति प्रदान गर्न र नेपाल र जापानबीचको सम्बन्धलाई थप निरन्तरता दिन पनि यो सेमिनार आवश्यक रहेको डा. शाक्यको भनाइ छ ।

जापानको कृषि, वन तथा मत्स्यपालन मन्त्रालय अर्न्तगतको राष्ट्रिय कृषि परिषद् जापानले विगत ७० वर्षदेखि कृषि क्षेत्रमा काम गर्न जान प्राविधिक प्रशिक्षार्थी र निर्दिष्ट दक्ष कामदारहरुको कृषि सीप मुल्याकंन मापन सम्बन्धित परीक्षा संचालन गरिरहेको एक प्रतिष्ठित सरकारी संस्था हो । यस संस्थाले गएका वर्षहरुमा भारतसहित अन्य १६ वटा मुलुकहरुमा जापानमा कृषि क्षेत्रमा काम गर्न जान प्राविधिक प्रशिक्षण वा आफनो सिप दक्षता अभिवृद्धि गर्न इच्छुक युवाहरुलाई लक्षित गरी परामर्श सेमिनारको आयोजना गर्दै आएको छ ।

# विनायकमा रोबोटिक तथा पुरातात्विक सामग्रीहरूको प्रदर्शनी



मध्यपुर थिमि । वैज्ञानिक शिक्षा आजको आवश्यकताः शैक्षिक उत्कृष्टता विनायकको विशेषता मान्दै युगानुकूल, स्तरीय र वैज्ञानिक शिक्षा प्रदान गरी दक्ष, प्राविधिक र आत्मनिर्भर नागरिक निर्माण गर्न लागि परेको विनायक शिक्षा निकेतन इङ्लिस स्कुलले मङ्सिर २१ गते रोबोटिक तथा पुरातात्विक दृष्टिले महत्त्वपूर्ण सामग्रीहरूको प्रदर्शनी कार्यक्रमको आयोजना गरेको छ ।

विद्यार्थीहरुलाई विज्ञान र प्रविधिबारे परिचित गराउने तथा समाजमा परम्परादेखि प्रयोग गरिरहेका तर हाल लोपोन्मुख अवस्थामा रहेका पुरातात्विक मूल्य र मान्यता अनुसारका सामग्रीहरू प्रदर्शन गर्दै विद्यार्थीहरुलाई प्रयोगात्मक तथा जीवनपयोगी कुराहरू सिकाउने उद्देश्यले उक्त कार्यक्रम आयोजना गरिएको विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले जानकारी दिए ।

कक्षा ४ देखि १० सम्मका विद्यार्थीहरु सहभागी भएको तथा विद्यालयको अतिरिक्त क्रियाकलाप विभागको संयोजनमा आयोजित उक्त कार्यक्रममा विद्यार्थीहरुले विज्ञान र प्रविधि प्रयोग गरी आफूले बनाएका २४ ओटा रोबोटिक प्रोजेक्ट तथा आफ्नो घरमा भएका पुरातात्विक दृष्टिले महत्त्वपूर्ण करिब २०० वटा प्राचीन सामग्रीहरू समेत प्रदर्शन गरी त्यसको वैज्ञानिक, प्राविधिक, ऐतिहासिक र पुरातात्विक महत्वका बारेमा प्रकाश पारेका थिए । विशेष गरेर मध्यपुर थिमिमा पहिलोपटक औपचारिक रूपमा रोबोटिक कक्षा सञ्चालन गरी रोबोटिक प्रदर्शनी गर्न सफल विद्यालय विनायक शिक्षा निकेतन बन्न सकेको कार्यक्रम भव्य र सभ्य रुपमा सफल भएको थियो ।







भक्तपुर TIMES

वर्ष १८ अङ्क १९ २०८१ मंसीर २६ गते बुधबार
11 Dec. 2024 Wednesday



# शिक्षा विधेयकका लागि सदन र सडकबाट दबाब आवश्यक : प्रचण्ड




भक्तपुर । नेकपा(माओवादी केन्द्र)का अध्यक्ष एवं पूर्व प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले विद्यालय शिक्षा विधेयक पारित गर्न सदन र सडकबाट दबाब आवश्यक रहेको बताएका छन् । सदनबाट आफ्नो पार्टीले दबाब दिने भन्दै उनले शिक्षकहरूलाई सडकबाट दबाब दिन आग्रह गरे ।

एकीकृत अखिल नेपाल शिक्षक संगठनको प्रथम राष्ट्रिय परिषद तथा शिक्षक समाज नेपालसँगको एकता घोषणा कार्यक्रममा बोल्दै प्रचण्डले शिक्षकहरूलाई सडक आन्दोलनका लागि तयार रहन आग्रह गरे । शिक्षकहरुको सडक आन्दोलनलाई पार्टीको पूर्ण समर्थन रहने भन्दै उनले आफू सहभागी हुनेसमेत प्रतिवद्धता जनाए ।

आफू नेतृत्वको सरकारले शिक्षा विधेयक संसदमा दर्ता गरेर पारित गर्ने प्रयास गर्दा सरकार ढलेको भन्दै प्रचण्डले शिक्षक कर्मचारीको अधिकार प्राप्तिका लागि शिक्षा विधेयक संसदबाट पारित हुनुपर्ने बताए । शिक्षा विधेयक पारित गर्न सदनमा छलफल र सडकमा आन्दोलन चर्काउनुपर्नेमा उनको जोड थियो ।

शिक्षा नसुध्रिएसम्म देश नसुध्रने र शिक्षा सुध्रन शिक्षा विधेयक संसदबाट पारित हुनुपर्ने भन्दै प्रचण्डले भने-शिक्षा विधेयकका पक्षमा हुने शिक्षकका जुनसुकै आन्दोलनलाई हामी सघाउँछौँ । विद्यालय कर्मचारी, इसिडि, राहत, करारलगायतका शिक्षाका मुद्दा सम्बोधन शिक्षा ऐनबाट मात्रै सम्भव रहेकोमा उनको जोड थियो ।

कार्यक्रममा नेपाल शिक्षक महासंघका अध्यक्ष लक्ष्मी किशोर सुवेदीले आउँदो संसदको हिउँदे अधिवेशनमा शिक्षा विधेयक पारित गर्न दबाब दिन शिक्षकहरुले सडकबाट दबाब दिने बताए । अब हिउँदे अधिवेशन शुरु हुनसाथ शिक्षकहरू सडकमा उत्रनेछन्, शिक्षा विधेयक संसदबाट पारित नभएसम्म आन्दोलन र दबाब जारी रहनेछ-सुवेदीले भने ।

शिक्षा विधेयक पारित हुन षडयन्त्र हुनसक्ने भन्दै अध्यक्ष सुवेदीले छिट्टै २ लाख ५० हजारर शिक्षक सडकमा उतारेर शिक्षक आन्दोलन भाग-२ गर्ने उद्घोष गरे । हिउँदे अधिवेशनमा शिक्षा विधेयक संसदबाट पारित हुनै पर्छ भन्दै सुवेदीले अन्यथा शिक्षकले बानेश्वर, सिंहदरबार र बालुवाटार घेर्ने चेतावनी दिए ।

कार्यक्रममा एकीकृत अखिल नेपाल शिक्षक संगठनका अध्यक्ष शंकर अधिकारीले उत्पीडित शिक्षकको अधिकार प्राप्तिका लागि शिक्षा विधेयक संसदबाट पारित हुनैपर्ने बताए । आउँदो संसदको हिउँदे अधिवेशनमा शिक्षा विधेयक पारित नभए सडकमा शिक्षक आन्दोलन भाग-२ शुरु हुने उनको चेतावनी थियो ।

अधिकार र कर्तव्यसहित सूचना प्रविधि, आर्टिफिसियल इन्टिलिजेन्सयुक्त गरिखाने शिक्षा निर्माणका लागि मुलुकमा एकीकृत शिक्षक आन्दोलन आवश्यक रहेकोमा उनको जोड थियो । २ दिनसम्म चल्ने संगठनको परिषद भेलामा देशभरका ५ सय बढी शिक्षकहरुको सहभागिता रहेको छ ।

# नेपाल इन्जिनियरिङ कलेजद्वारा प्रादेशिक छात्रवृत्ति वितरण

काठमाडौं । मुनाफारहित सामाजिक शैक्षिक संस्थाका रुपमा सञ्चालित नेपाल इन्जिनियरिङ कलेजले प्रादेशिक छात्रवृत्ति वितरण गरेको छ । कलेजले आइतबार प्रादेशिक छात्रवृत्ति परीक्षामा सर्वोत्कृष्ट भएका पाँच वटा प्रदेशका विद्यार्थीलाई पूर्ण छात्रवृत्ति प्रदान गरेको हो ।

प्रादेशिक छात्रवृत्ति पाउनेहरुमा मधेश प्रदेशबाट अभिषेक कुमार यादव, बागमती प्रदेशबाट सुवास गिरी, गण्डकी प्रदेशबाट पार्वती पनेरु, लुम्विनी प्रदेशबाट विजयकुमार यादव र सुदुरपश्चिम प्रदेशबाट सरोज देउवा रहेका छन् । कोशी प्रदेश र कर्णाली प्रदेशबाट भने प्रादेशिक छात्रवृत्ति छनौट बाँकी रहेको छ । नयाँ शैक्षिक सत्रको भर्ना अभियान अझै केही दिन बाँकी रहेकाले दुई प्रदेशको प्रादेशिक छात्रवृत्ति वितरण गर्न बाँकी छ ।

छात्रवृत्ति पाउने विद्यार्थीहरुले क्रमशः इलेक्ट्रिक्स एण्ड इलेक्ट्रोनिक्स, सिभिल इन्जिनियरिङ, कम्प्युटर इन्जिनियरिङ, विडिएच, सिभिल एण्ड रुलर इन्जिनियरिङ विषयमा अध्ययन गर्नेछन् । छात्रवृत्ति पाउने सबै विद्यार्थीहरुले सामुदायिक विद्यालय अध्ययन गरेका छन् । कलेजले प्रादेशिक छात्रवृत्ति प्रदान गरेर दुरदराजमा रहेका गरिब तथा जेहेन्दार विद्यार्थीहरुलाई इन्जिनियरिङ शिक्षा हासिल गर्ने अवसर दिएकोमा विद्यार्थीहरुले कृतज्ञता व्यक्त गर्दै मेहनत गरेर अध्ययन गर्ने बताए ।

कलेजका सहायक प्राचार्य मोहनध्वज केसीले छात्रवृत्ति प्राप्त गर्ने विद्यार्थीलाई बधाई तथा शुभकामना दिँदै पोखरा विश्वविद्यालयको छात्रवृत्ति मापदण्ड अनुसार प्रादेशिक छात्रवृत्तिको परीक्षा लिइएको बताउँदै कलेज सदैव जेहेन्दार र मेहनती विद्यार्थीहरुको पक्षमा रहेको बताउनु भयो । कलेजका प्राचार्य दुर्गाप्रसाद भण्डारीले छात्रवृत्तिको मर्यादा र गरिमालाई कायम राख्नेगरी मेहनतका साथ अध्ययन गर्न सुझाउनु भयो । सामुदायिक विद्यालयमा अध्ययनरत विद्यार्थीहरुको इन्जिनियरिङ शिक्षामा पहुँच पुगोस् भन्ने हेतूले कलेजले प्रादेशिक छात्रवृत्ति दिँदै आएको प्राचार्य भण्डारीको भनाई छ ।

कलेजले हरेक वर्ष ७० लाख बराबरको प्रादेशिक छात्रवृत्ति वितरण गर्ने बताउँदै प्राचार्य भण्डारीले भन्नुभयो,'नेपाल इन्जिनियरिङ कलेजले वर्षेनी गरिब तथा जेहेन्दार विद्यार्थीलाई विभिन्न छात्रवृत्ति प्रदान गर्दै आइरहेको छ । यस वर्षपनि विभिन्न प्रदेशहरुबाट प्रादेशिक छात्रवृत्तिमा विद्यार्थीहरुले प्रतिष्पर्धा गर्नुभएको छ । सामुदायिक विद्यालयमा पढेका विद्यार्थीहरुलाई इन्जिनियरिङ अध्ययन गर्न प्रेरित गर्नका लागि कलेजले यो छात्रवृत्ति प्रदान गरेको हो ।'

कलेजले हरेक वर्ष सामुदायिक स्तरमा कलेजका विकासमा उल्लेखनीय योगदान गर्दै आइरहेको चाँगुनारायण नगरपालिकाका ४ वटा वडाका दुई जना विद्यार्थी, कागेश्वरी मनहरा नगरपालिकाको वडा नं. ७ गरी ५ वटा वडा वाहेक चाँगुनारायण नगरपालिकाले सिफारिस गरेका गरिब, जेहेन्दार विद्यार्थीहरुलाई पूर्ण छात्रवृत्ति र ५० प्रतिशत छुट सहितको छात्रवृत्ति दिँईदै आएको छ । यसका अलावा कलेजमा कार्यरत शिक्षक कर्मचारीका सन्ततीहरुका लागिपनि छात्रवृत्ति दिँदै आएको छ । इन्जिनियरिङ अध्यनार्थ भर्ना हुने विद्यार्थीको आर्थिक, शैक्षिक अवस्था हेरेर विभिन्न छुटहरु पनि दिइने गरिएको छ । मुनाफारहित शैक्षिक संस्था भएकाले हरेक वर्ष कलेजले करिब १५ करोड बराबरको विभिन्न छात्रवृत्ति र छुटहरु दिँदै आएको छ ।

त्यसो त सामाजिक उत्तरदायित्व अन्तरगत गतवर्ष जाजरकोट र रुकुमपश्चिममा गएको विनाशकारी भुकम्पबाट प्रभावित सामुदायिक विद्यालयका ५ जना विद्यार्थीहरुलाई पूर्णछात्रवृत्ति प्रदान गरेको थियो । नेपालका दुरदराजमा रहेका विद्यार्थीहरुले सर्वसुलभ शुल्कमा गुणस्तरीय इन्जिनियरिङ शिक्षा प्राप्त गर्न सकुन् भनेर कलेज स्थापना भएको र आगामी दिनहरुमा पनि सोही अनुरुप विद्यार्थीहरुलाई छात्रवृत्ति वितरण गर्दै लैजाने प्राचार्य भण्डारीले बताउनु भयो ।

कलेजमा स्नातक तहमा इन्जिनियरिङ विधामा सिभिल, सिभिल एण्ड रुलर, कम्प्युटर, इलेक्ट्रिक्स एण्ड इलेक्ट्रोनिक्स, इलेक्ट्रोनिक्स एण्ड कम्युनिकेशन, सिभिल फर डिप्लोमा होल्डर्स तथा आर्किटेक्टको पढाई हुने गरेको छ । पोखरा विश्वविद्यालयबाट सम्बन्धन प्राप्त यस कलेजको शैक्षिक गुणस्तर, भौतिक पूर्वाधार, कलेजको शैक्षिक नतिजा, विद्यार्थीले प्राप्त गर्ने राष्ट्रिय, अन्तराष्ट्रिय अवसरहरुको मुल्यांकन गर्दै २०६० सालदेखी लगातार स्थायी अनुमति दिँदै आएको छ ।

# भक्तपुरमा स्काउटको साहसिक खेल

स्काउटको साहसिक खेलको महत्त्व धेरै छ, विशेष गरी बालबालिका र युवाहरूको व्यक्तित्व विकास, सामाजिक सञ्जाल विस्तार, र शारीरिक तथा मानसिक क्षमताको वृद्धि गर्न यसको महत्त्वपूर्ण भूमिका रहेको छ। साहसिक खेलहरू चुनौतीपूर्ण र जोखिमपूर्ण हुने भएकाले सहभागीहरूले आफ्नो डरलाई जित्दै आत्मविश्वास बढाउन सक्छन् भन्दै स्काउट खेलहरू सामूहिक प्रयासमा आधारित हुन्छन्। यसले सहभागीलाई अरूसँग सहकार्य गर्न र नेतृत्व गर्न सिकाउँछ। साथै विविध सांस्कृतिक र सामाजिक पृष्ठभूमिका व्यक्तिहरूसँग सम्पर्कमा आउँदा सहभागीहरूले मित्रता र सामूहिक भावना बढाउँने कुरा ज्बकजयलभ ऋबकउ क्ष्मभ चाँगुनारायण नगरपालिका - ७ स्थित बागेश्वरी सुरु गरेको त्यहाँका व्यवस्थापक किशोर गोसाइले बताउनुभयो। शारीरिक व्यायामसँग सम्बन्धित हुने भएकाले स्वास्थ्य सुधार गर्न र सक्रिय जीवनशैली अपनाउन प्रेरित गर्छ। यसबाट स्काउट बालबालिका तथा सहभागीहरूले ठूलो आनन्द र सन्तुष्टि अनुभव गर्छन्, जसले उनीहरूको सकारात्मक सोचलाई प्रवर्द्धन गर्छ। यो प्रकृतिमा आधारित खेलहरू भएकोले वातावरणप्रति प्रेम र संरक्षण गर्ने भावना विकसित गर्छन्। यस्ता खेलहरूले सहभागीलाई चुनौतीपूर्ण परिस्थितिमा निर्णय लिन र समस्या समाधान गर्न सक्षम बनाउँने क्याम्प सुपरभाइजर सुशान्त नयाँजुले बताउनुभयो। साहसिक खेलहरूले युवा पुस्तालाई अनुशासन, आत्मनिर्भरता, र साहसिक व्यक्तित्वको विकास गर्न सहयोग पुऱ्याउँछन्। स्काउटको साहसिक खेल मात्र मनोरञ्जनको साधन नभई व्यक्तित्व विकासको मार्ग पनि हो। उक्त क्याम्पमा मिति २०८१ मंसिर २१ देखि २३ गते सम्म ४ ओटा विद्यालयका १०० जना भन्दा बढी स्काउटका एडभाञ्चर क्याम्प भइरहेको स्काउट मास्टर जीवन सुवालले जानकारी गर्नुभयो। स्काउट र खेल (क्अयगतष्लन बलम कउयचतक) का बिचमा गहिरो सम्बन्ध छ।

स्काउटिङको उद्देश्य केवल सामाजिक र नैतिक विकास मात्र नभएर शारीरिक फिटनेस र आत्मविश्वास बढाउनु पनि हो, जसमा खेलले महत्त्वपूर्ण भूमिका खेल्छ। स्काउट गतिविधिहरूमा हाइकिङ, क्याम्पिङ, डोरी चढ्ने (रोप क्लाइम्बिङ), ट्रेकिङ, र विभिन्न शारीरिक अभ्यास समावेश हुन्छ। यी सबै गतिविधिहरूले खेलका माध्यमबाट शारीरिक स्वास्थ्य सुधार्न सहयोग पुऱ्याउँछ। खेल खेल्दा समूहको भावना र नेतृत्व क्षमता विकास हुन्छ। स्काउटिङमा, खेलहरू प्रायः समूहमा गरिन्छ, जसले गर्दा टोलीका सदस्यहरूबीच सहकार्य र समन्वय सिकिने भएकोले यसको महत्त्व हुने स्काउट मास्टर निर्जला प्रजापतिले बताउनुभयो। खेलले व्यक्तिमा आत्मविश्वास र अनुशासन विकास गर्न मद्दत गर्छ। स्काउटिङले यसलाई अझ प्रभावकारी बनाउँछ, किनकि स्काउटहरूले नियमित रूपमा चुनौतीपूर्ण गतिविधिहरूमा भाग लिन्छन्। खेलले तनाव कम गर्छ र सकारात्मक मानसिकता विकसित गर्छ। स्काउटिङमा, खेल र अन्य गतिविधिहरूले बच्चाहरूलाई समस्या समाधान गर्ने क्षमता, धैर्य र आत्मनियन्त्रण सिकाउँछ। स्काउट खेलहरू सधैं शारीरिक मात्र हुँदैनन्; तिनीहरू रणनीतिक सोच, तर्क क्षमता, र शीघ्र निर्णय गर्ने सीप पनि बढाउँछन्।

बालबालिकाहरूलाई समाजमा घुलमिल हुन र राम्रो सम्बन्ध बनाउने अवसर दिन्छ। स्काउटिङमा सहभागीहरू बिभिन्न पृष्ठभूमिका साथीहरूसँग खेल खेल्ने मौका पाउँछन्, जसले सामाजिक अन्तरघुलनलाई प्रोत्साहित गर्छ। स्काउटिङमा दौड, छुपाछुपी, र ट्रेकिङ, गीत, नृत्य, र टोली खेल, नक्सा अध्ययन, हाइकिङ र सरप्राइज एक्टिभितिज खेलहरूको समिश्रणले शारीरिक, मानसिक, र सामाजिक विकासमा सन्तुलन कायम राख्छ। यो बच्चा, किशोर, र युवाहरूका लागि जीवनभर उपयोगी हुने गुणहरू सिक्न भक्तपुर मै क्याम्प साइड सुरु गरेको छ।

# अमेरिकामा टिकटक माथि प्रतिबन्ध लगाउने तयारी !




एजेन्सी । अमेरिकामा टिकटकमाथि प्रतिबन्ध लगाउने तयारी तीव्र भएको छ । अमेरिकी संघीय अदालतले चिनियाँ कम्पनी बाइटडान्सको लोकप्रिय छोटो भिडियो एप टिकटकलाई प्रतिबन्ध लगाउन सकिने कानुनलाई पुनःस्थापित गरेको छ । अदालतले टिकटकको अमेरिकी अपरेशन बेच्ने वा डिसेम्बर १९ सम्ममा प्रतिबन्ध लगाउने विकल्प दिएको छ । राष्ट्रिय सुरक्षालाई प्राथमिकता दिने यस ऐनको उद्देश्य रहेको बताइएको छ ।

तर, पूर्व अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले टिकटकलाई प्रतिबन्ध लगाउन नदिने स्पष्ट रुपमा बताएका छन् । यो एप १७० मिलियन भन्दा बढी प्रयोगकर्ताहरूसँग अमेरिकामा अत्यन्त लोकप्रिय छ ।

**टिकटक अमेरिकामा किन प्रतिबन्धित?**

एफबिआई निर्देशक क्रिस रेले टिकटकलाई राष्ट्रिय सुरक्षाको लागि गम्भीर खतराको रूपमा वर्णन गर्दै चिनियाँ कम्पनीहरूले चिनियाँ सरकारको आदेश पालना गर्न बाध्य भएको बताएका छन् । उनले उक्त एपमार्फत चिनियाँ सरकारले अमेरिकी प्रयोगकर्ताको डाटामा पहुँच गर्न सक्ने र यसलाई राष्ट्रिय सुरक्षामा खतराका रूपमा हेरिएको आरोप लगाए । यसै क्रममा कांग्रेसका केही सदस्यहरूले बाइटडान्समाथि चिनियाँ सरकारको प्रभाव रहेको आरोप लगाउँदै कम्पनीले आफ्ना प्रयोगकर्ताहरूको संवेदनशील डाटा चिनियाँ सरकारसँग बाँड्न बाध्य भएको बताएका छन् ।

यद्यपि टिकटकले यी आरोपहरूलाई अस्वीकार गरेको छ, बाइटडान्सको सहायक डोयिन सूचना सेवामा चिनियाँ सरकारको संलग्नता केवल १% मा सीमित छ र विश्वव्यापी सञ्चालनहरूमा कुनै प्रभाव छैन ।

**डाटा र एल्गोरिदममा विवाद**

एफबिआईले दावी गरेको छ कि टिकटक डाटा पहुँच गर्न र एल्गोरिदम परिवर्तन गर्न प्रयोग गर्न सकिन्छ । राष्ट्रिय सुरक्षा एजेन्सीका निर्देशक पॉल नाकासोनले टिकटकको एल्गोरिदमले प्रयोगकर्ताहरूलाई प्रभाव पार्न वा उनीहरूको व्यवहार परिवर्तन गर्न मद्दत गर्न सक्ने चिन्ता व्यक्त गरेका छन् । जवाफमा, टिकटकले भनेको छ कि यसले कुनै पनि सरकारलाई आफ्नो एल्गोरिदम वा डाटा अपरेशनहरू नियन्त्रण गर्न अनुमति दिँदैन । अदालतले पनि राष्ट्रिय सुरक्षासँग सम्बन्धित जोखिमको छानबिन र समाधानका लागि उचित प्रक्रिया अपनाएको भन्दै कानूनको समर्थन गर्दै फैसला गरेको छ ।

**चीनको राष्ट्रिय खुफिया कानूनको बारेमा चिन्ता**

सांसदहरूले बाइटडान्सले चीनको २०१७ राष्ट्रिय खुफिया कानून अन्तर्गत टिकटक प्रयोगकर्ताहरूको डाटा चिनियाँ सरकारलाई हस्तान्तरण गर्ने गर्न सक्ने अपेक्षा गरेको छ । यद्यपि टिकटकले आफ्नो सञ्चालन अमेरिकी कानून अन्तर्गत रहेको र अमेरिकी प्रयोगकर्ताको डाटा चिनियाँ सरकारलाई कहिल्यै नदिएको स्पष्ट पारेको छ । कम्पनीका सीईओले डाटा सुरक्षालाई प्राथमिकता दिने आश्वासन दिएका छन् ।

**एपले युवाको मानसिक अवस्थालाई असर गरिरहेको छ**

मार्च २०२२ मा, आठ अमेरिकी राज्यहरूले कसरी टिकटक प्रयोगले युवाहरूको मानसिक र शारीरिक स्वास्थ्यलाई असर गरिरहेको छ भनेर अनुसन्धान गर्न थाले । अनुसन्धानले कसरी प्लेटफर्मको डिजाइन र एल्गोरिदमहरूले प्रयोगकर्ताहरूलाई, विशेष गरी साना बालबालिकाहरूलाई लामो समयसम्म व्यस्त राख्छ भनेर बुझ्न खोज्यो । यस आलोचनाको जवाफ दिँदै, टिकटकले १८ वर्ष मुनिका प्रयोगकर्ताहरूका लागि प्लेटफर्म सुरक्षित बनाउन धेरै कदम चालेको बताएको छ ।

अब के हुने हो ?

टिकटकको बारेमा विवाद अमेरिकी राजनीतिक र कानूनी सर्कलमा लगातार गहिरो छ । जहाँ सुरक्षा र डेटा गोपनीयताको बारेमा चिन्ताहरू छन्, टिकटकको लोकप्रियताले यसलाई चुनौतीपूर्ण प्रतिबन्ध गर्ने योजना बनाउँछ । टिकटकले कसरी आफ्नो सञ्चालन कायम राख्छ र यस विवादको समाधानले कुन दिशा लिन्छ भन्ने कुरा आगामी दिनमा हेर्न रोचक हुनेछ । भारतमा अहिले पनि टिकटक प्रतिबन्ध छ । नेपालमा पनि केही समय अगाडिसम्म टिकटक माथि प्रतिबन्ध लगाइएको थियो । जब नेपालमा नेकपा एमालेका अध्यक्ष केपी ओलीको नेतृत्वमा नेपाली कांग्रेसको गठबन्धनको सरकार बनेपछि नेपालले टिकटक माथि लगाएको प्रतिबन्ध हटाएको हो ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### बीआरआई ऋण वा अनुदान के ?

बीआरआई ऋणमा हुन नहुने अडान राख्दै आएको कांग्रेस हस्ताक्षर भएर आएपछि अन्योलमै रहेको छ । अर्को तर्फ नेकपा माओवादीलगायतका विपक्षीहरु चीनसँगको बीआरआई सम्झौतालाइ सकारात्मक रुपमा लिएको कारणले प्रधानमन्त्री ओलीको चीन भ्रमणलाई सफल मानिएको छ । यसबाट प्रधानमन्त्रीले पनि बिआरआईमा ऋण र अनुदान दुबै हुन सक्ने गरी सम्झौता भएको खुलासा गरेका छन् । यस अघि उनले चीनसँग ऋणका सम्बन्धमा कुनै प्रकारको सम्झौता नभएको र आफूले अबको १८ महिना पछि देउवालाई सत्ता सुम्पने बताउँदै आएका थिए । यसबाट पनि ओली नेपाली कांग्रेसलाई खुशी पार्नकै लागि खेलेको भूमिकाको रुपमा हेरिने गरेको थियो ।

तर ओलीको गृह जिल्ला झापाा भ्रमणको क्रममा ओलीले ऋण र अनुदान दुबै हुन सक्ने खुलासा गरेको छन् जसको कारण यो विषय थप विवादमा आएको छ । रहस्यपूर्ण कुरा त के छ भने बीआरआईमा हस्ताक्षर भए लगत्तै नेपाल आएका अमेरिकी सहायक विदेशमन्त्री डोनाल्ड लु फर्किएपछि प्रधानमन्त्रीले बीआरआई ऋणमा हुनसक्ने बताएका छन् । अमेरिकाले बीआरआईबारे प्रश्न गर्ने भएकाले लुको नेपाल भ्रमण पूर्वनिर्धारित भएपनि यसलाई छल्न ओली झापा गएको आकलन गरिएको छ । लुले नेकपा माओवादीका अध्यक्ष र नेपाली कांग्रेस सभापति देउवासँग भेटवार्ता गरेपनि सरकार प्रमुखसँग भेट गर्न पाएनन् ।

बीआरआईले कांग्रेसभित्र विवाद बढाएको छ । प्रधानमन्त्री ओलीले १७-२० मा छिमेकी मुलुक चीन भ्रमणका क्रममा बीआरआई फ्रेमवर्कमा हस्ताक्षर गरेका थिए । फ्रेमवर्कका कतिपय विषय गोप्य राखिएको भन्दै कांग्रेसका नेता शेखर कोइरालाले संसदमा छलफल गराउनुपर्ने पक्षमा उभिएका छन् । एक हप्ता अगाडि बीआरआईबाट ऋण लिन्नौं, अनुदान मात्र लिन्छौं भनेर पदाधिकारीहरूले निर्णय गरे, एक हप्तापछि सम्झौता भएर आउँदा ऋण र अनुदान दुईवटै हस्ताक्षर भयो भन्ने कुरा प्रधानमन्त्रीले नै बोलेपछि कांग्रेसमा संशयबढ्नु स्वभाविक पनि हो, कांग्रेसका एक नेताले भने ।

प्रधानमन्त्री ओलीले नै बीआरआई ऋण वा अनुदान दुवै हुन सक्ने बताएका कारण यसले कांग्रेसमा थप विवाद नित्याउने देखिएको छ । झापाको बिर्तामोडमा सोमबार ओलीले बीआरआईबारे ऋणको कुरा उठाएका हुन् । बीआरआई ऋण पनि हुन सक्छ, अनुदान पनि हुनसक्छ या संयुक्त लगानी पनि हुनसक्छ भन्दै उनले बीआरआई भनेको के हो ? भन्ने नबुझ्रेर धेरै कराएको बताएका छन् । बीआरआई चीनले अरु देशहरुलाई गर्ने सहयोग विकासमा गर्ने सहयोग त्यो ऋण पनि हुनसक्छ, त्यो अनुदान पनि हुनसक्छ सहकार्य, संयुक्त लगानी पनि हुनसक्ने ओलीको भनाइ थियो ।

प्रधानमन्त्री भन्दा अगाडि नै एमाले र अन्य कम्युनिस्ट नेताहरूले बीआरआईमा ऋणको पनि सम्झौता भएको भन्न थालेका थिए । सोमबार प्रधानमन्त्री ओलीले यसमा ऋणका कुरा निकालेपछि प्रधानमन्त्री र परराष्ट्रमन्त्रीले ऋण लिने सहमति भएको होइन, चीनसँग अहिले गरिएको सहमति अनुदानमा हो भनेको कुरा पनि मिथ्या देखिएका छन् । नेपालले प्राप्त गर्ने चिनियाँ सहयोग वर्षौंदेखि अलमलिएको र यसपटकबाट सम्झौता भएको दाबी प्रधानमन्त्रीको छ । यसबाट नेपालको चीनसँगको सम्बन्ध बलियो बन्ने देखिएको छ । जसको विपक्षी दलहरुले राम्रै प्रतिक्रिया दिएका छन् भने नेपाली कांग्रेसलगायत अमेरिकी र भारतीय स्वार्थमा लागेर यसको विरोध गर्नेहरुका कारण बर्तमान सत्ता समिकरणमा भने दरार आउन सक्ने आकंलन गरिएको छ । यसबाट नेपाली कांग्रेसको लागि यो विषयले थप चिन्ता बढाउने देखिएको छ ।

# मासु खानेको स्वार्थ र बलिप्रथा

● जगत शाही

बलिको अर्थ आफैंभित्र रहेको पशु जस्तो स्वभावलाई मार्ने हो, निर्दोष प्राणीलाई होइन । भगवानको नाम दिएर जनावरलाई जबरजस्ती काटेर पकाएर खानु भनेको हामीले मान्ने भगवानमाथि नै गरिएको अपमान हो । कुनै पनि धर्म ग्रन्थमा निर्दोष जनावर मारेर देवताको मूर्तिमा रगत चढाउँदा देवता खुशी हुन्छन् भनेर लेखेको भेटिदैन् ।

एउटा निर्दोष प्राणीलाई मारेर, मासु पकाएर खाँदा कुन चाहिँ परमसत्ताले हामीलाई आर्शिवाद दिन्छ ? बलिको गलत अर्थ लगाएर कहिलेसम्म निर्दोष प्राणीको हत्या गर्ने ? विगत २० वर्ष भन्दा लामो समयदेखि भागवत गीता, वेदान्त र बोधप्रत्युषा जस्ता धर्मग्रन्थ पढाउँदै आएका आचार्य प्रशान्त भन्छन्, "बलि अर्थात् पशुवृत्तिलाई मार्नु हो । कुनै जनावरलाई मार्ने कुरा होइन, आफ्नो भित्रको अहंकार र अज्ञानता मार्नु हो । हामीभित्र एउटा जंगली घोडा छ, जो दिशाहीन भएर दौडिन्छ । त्यो कहीँ पनि पुग्दैन, बस कुदिरहन्छ, यही त हो हाम्रो मन। त्यसैको बली चढाउनु पर्छ ।"

पशुबलिको कथाको सन्दर्भको मर्म बुझ्नुपर्दा वास्तवमा, मानिस पनि जंगलको उपज हो । त्यसैले उसको आदिम प्राकृतिक जनावरलाई हटाएर चेतनालाई उठाउनुपर्ने कुरा धर्मले बताएको छ, किनभने त्यही जनावरले हामीलाई जनावर जस्तै व्यवहार गराउँछ ।

धर्मले प्रतीकात्मक रूपमा हामीलाई यो सिकाइरहेको छ कि भित्रको त्यो पशु, जो केवल खाने, सुत्ने र भोग गर्नेमा सीमित छ, जसले हाम्रो चेतनालाई माथि उठ्नबाट रोक्छ, त्यसलाई हामीले मार्नुपर्छ । जस्तै, चेतनाले भन्यो, "जलवायु परिवर्तन सम्बन्धी काम गर," तर तुरुन्तै भित्रको जनावरले भन्यो, "रहन दे, जा सुत ।"

हामीभित्र रहेको आदिम पशु वृत्तिको आत्मज्ञान द्वारा उसको बलि दिनुपर्छ र हाम्रो चेतनालाई माथि उठाउनु पर्छ ।

गढीमाई मेला

नेपालको बारा जिल्लास्थित गढीमाई देवी मन्दिर एक ऐतिहासिक धार्मिक स्थल हो । जहाँ प्रत्येक पाँच वर्षमा गढीमाई मेला आयोजना हुन्छ, जसमा हजारौं निर्दोष पशुको बलि हुन्छ । यहाँ मनोकामना पुरा गर्ने उद्देश्यले बलि दिएपनि धार्मिक आस्थाका नाममा गरिने यो बलि प्रथा मानिसको आस्था र विश्वासलाई सुदृढ गर्ने लक्ष्यमा नभई गहिरो अज्ञानता र अन्धविश्वासलाई प्रोत्साहन गर्ने गरेको धार्मिक विद्वानहरुले बताउँदै आएका छन् ।

गढीमाइमा हुने बलिको बारेमा आचार्य प्रशान्तको अभिमतअनुसार गढीमाइमा बलिको स्रोत जब एक सज्जनको जीवन समस्याले घेरिएको थियो । दुखी थिए । तब एकदिन उनको सपनामा गढीमाई देवी आएर खुन दिनु भनिन् । अध्यात्म धेरै सूक्ष्म कुरा हो । अब यहाँ खुनको मतलव यो होइन कि हामीले काट्यौ र रगत आयो, खुनको मतलव जो मेटिन जरुरी छ, जसको विनाश हुन आवश्यक छ, त्यसको अन्त्य गर्नु नै खुन हो । बलिको मतलब हामी भित्र रहेको त्यो जनावर जसले दुनियाँको शोषण गर्न र भोग्नको लागि हामी भित्र अहंकारको रुपमा बसेको छ । त्यसको अन्त्य गर्नु बलि हो । यो जरुरी छ ।

गढीमाई देवी पूजाको सिद्धान्त बुझ्न र शाक्ति परम्पराको दर्शनलाई बुझ्नु आवश्यक छ । देवीको अर्थ बुझ्न सकेपछि गढिमाई देवीको महत्त्व आफैं प्रस्ट हुन्छ । देवीसँग सम्बन्धित सम्पूर्ण कथा, दर्शन र सिद्धान्त दुर्गा सप्तशती ग्रन्थमा पाइन्छ ।

पछिल्लो समय देवी पूजा, गढीमाई मेला उपभोक्तावादी चार्ड बन्दै गएको छ । देवी उपासकले दुर्गा सप्तशती पढेका छैनन् भने, त्यो स्वाभाविक छ कि, उनीहरूले गढीमाई मेलालाई भौतिक चटारो र मनोरञ्जनको रूपमा सीमित गर्छन् । मासु, रक्सी सेवन, किनमेल, नाचगान र अन्य अभद्र क्रियाकलापमा समय बिताउँछन् ।

गढीमाई मेला केवल बाहिरी पूजाको चाड होइन । यो आत्मसुधारको अवसर हो । देवी उपासना भनेको हाम्रो भित्री अशक्तता, अज्ञानता र अहंकारमाथि विजय प्राप्त गर्नु हो । गढीमाई प्रतीक हुन्छ । हाम्रो जीवनका नौ चरणमा आत्मज्ञान प्राप्त गर्नु आवश्यक देखिन्छ ।

यो सन्देश जब हामी बाहिरी तामझाम र निर्दोष पशुको हत्यामा अल्झन्छौं, मासु खानेमा हाम्रो स्वार्थ लुकेको हुन्छ, तब हराउँछ ।

गढीमाई देवीलाई गहिरो रूपमा बुझ्नका लागि देवीको दर्शन र दुर्गा सप्तशतीलाई अध्ययन गर्न जरुरी छ । यसले हामीलाई सिकाउँछ कि देवी केवल बली पूजा अर्चनाको वस्तु होइनन्, देवी जीवनलाई उच्च चेतनाको दिशामा लैजाने प्रेरणा हुन् ।

बलिबारे सनातन धर्म के भन्छ ?

सनातन धर्म ग्रन्थमा पशुबलिको सम्बन्धमा यस्तो भनिएको छ ।

"राक्षसाः पिशिताशनाः"
अर्थात् पिशित (मासु) खानेहरू जीवित राक्षस हुन् ।

गीता, अध्याय १७, श्लोकः
"यजन्ते सात्विका देबान्यक्षरक्षान्सि राजसाः।
प्रेतान्भुत गणान्श्चान्ये यजन्ते तामसाः जनाः।"

अर्थात्: सत्वगुणी व्यक्तिहरू देवताको पूजा गर्दछन्, रजोगुणीहरू राक्षस र यक्षको पूजा गर्दछन् र तमोगुणीहरू भूत-प्रेतको पूजा गर्दछन् ।

कुनै पनि स्थानमा यदि तपाई देख्नुहुन्छ कि शक्ति पूजाको नाममा (तिनीहरूले आफ्ना भगवान र देवता नै भनेका छन्) मासु र राक्षसी चढ़ाइँदैछ भने, त्यसको अर्थ त्यहाँ भूतको पूजा भइरहेको छ । तामस गुण अन्तर्गत भूत, प्रेत र पिशाचको अनुष्ठानमा बलिको आवश्यकता पर्छ । शास्त्रअनुसार, यस्ता अनुष्ठानले मानिसलाई क्षणिक लाभ मात्र दिन्छ, तर यसको परिणामस्वरूप, त्यस्ता व्यक्तिलाई न यस जन्ममा सुख प्राप्त हुन्छ न परलोकमा ।

गीता, अध्याय ९ मा श्लोक छः

"यान्ति देबब्रता देवान, पित्रिन यान्ति पित्रिब्रता ।
भुतानि यान्ति भुतेज्या, यान्ति मध्याजिनोपी माम ।"

अर्थात् : देवताको पूजा गर्ने व्यक्ति देवताकै स्थानमा पुग्छ, पितृको पूजा गर्ने पितृकै स्थानमा पुग्छ, भूतको पूजा गर्ने व्यक्ति भूतकै स्थानमा पुग्छ र मेरो भक्त मसँगै पुग्छ ।

वैदिक सनातन धर्म र अहिंसा

वैदिक सनातन धर्मले "अहिंसा परमो धर्म" भनेको छ, अर्थात् अहिंसा सर्वोत्तम धर्म हो । यसले बलि (पशु हत्या) को विचारलाई धेरै परको कुरा मान्दछ । मांस भक्षणलाई ठूलो पाप मानिन्छ । भगवानको नाममा बलि (पशु हत्या) गर्ने व्यक्ति, शास्त्रज्ञान नहुने अज्ञानी, आशुरी या तामसिक तान्त्रिक अथवा भूत-प्रेत पुजारी हो । शास्त्रअनुसार, मांस भक्षणलाई ठूलो पाप मानिन्छ ।

गीता, अध्याय १२, श्लोक १५ः

"जो व्यक्तिको मृत्यु तामसिक गुण प्रभावित अवस्थामा भएको छ, त्यो अवश्य पनि मृत्युपछि जनावरको योनिमा जन्म लिनेछ ।"

अर्थात्, जो व्यक्ति तामसिक गुणको प्रभावमा मृत्युको शिकार हुन्छ, उसलाई पुनः जनावरको योनिमा जन्म लिनुपर्छ ।

महाभारतमा भनिएको छः
"सुरा मत्स्याः पशोर्मांसं द्विजातिनां बलिस्तथा
धूर्तः प्रवर्तितं चैतन्नैतद्वेदेषु कथ्यते"

अर्थात् : "मदिरा, माछा, मासु र द्विजको बलि जस्ता कार्य धूर्त (फटाहा) हरूले आफ्नो स्वार्थ सिद्ध गर्न थालेका छन्। वेदमा यस्ता कार्यको विधान छैन।"

मनुस्मृति, श्लोक छ
"अनुमन्ता विशसिता निहन्ता क्रयविक्रयी।
संस्कर्ता चोपहर्ता च खादकश्चेति घातकाः।"

अर्थात् : "जो पशुहत्या गर्छ, जो मांसाहारीको पक्ष लिन्छ वा प्रश्रय दिन्छ, जो मासुको बिक्री गर्छ, जो मासु पकाउँछ र जसले मासु भक्षण गर्छ, ती सबैको विनाश हुन्छ।"

वेद भन्छः
"पशून् पाहि मां हिंसात् "
अर्थात् : "कुनै पनि पशुप्राणीको हत्या गर्नु हुँदैन।"

लेखक शाही आचार्य प्रशान्तका वेदान्तका विद्यार्थी हुन्। खबरहबबाट







# सात गाउँले जात्रा र विविध दृष्टिकोण

देवराज महर्जन

**भौगोलिक अवस्थिति :**

काठमाडौंको दक्षिणपश्चिममा रहेका सात गाउँहरु पाँगा, नगाउँ, कीर्तिपुर, बोसीगाउँ, सतुङगल, ल्वँकोट र मच्छेगाउँमा मनाइने जात्रालाई सातगाउँले जात्राको रुपमा लिने गरिन्छ। आजभोलि जनसंख्याको वृद्धिसँगै थप नयाँ बसोवासले अन्य गाउँहरुसमेत यस जात्रामा आवद्ध भैसकेको स्थिति छ र जात्रा गर्ने परम्परामा क्रमिक रुपमा परिवर्तन पनि आइरहेको छ। यसले गर्दा सात गाउँले जात्रा अब साविक भन्दा बढी गाउँहरुमा मनाउने गरिन्छ । कीर्तिपुर नगरपालिका बनिसकेपछि पाँगा, नगाउँ र कीर्तिपुर तीन गाउँहरु नगरपालिकाभित्र रहेका छन् भने अन्य गाउँहरु पनि चन्द्रागिरी नगरपालिका अन्तर्गत पर्दछन् । विशेषगरी सात गाउँले जात्राको सम्बन्ध तीनथानाको बखु अर्थात बल्खु खोला नजिक रहेको पीठसँग छ ।

**किंवदन्ती:**

पौराणिक किंवदन्ती अनुसार काठमाडौंमा भएको होम यज्ञबाट छुटेर उड्दै आएका एकजोडी परेवा कीर्तिपुरको पश्चिमपट्टिको बखु पीठमा आएर अन्त्य भएको हुनाले तिनै परेवाको अन्त्यको हिसाबले नेपालभाषामा बखुमद अर्थात परेवाको दाहसंस्कार (अन्त्य) भयो भन्ने अर्थमा लिइन्छ । नेपालभाषामा परेवालाई बखु र अन्त्यलाई मन्त भनिन्छ । यस अर्थमा बखुमन्त अपभ्रंस भएर बखु मरः वा बखु मलः भएको मानिन्छ । तालपत्रको आधारमा कुरा गर्दा बखुमरःको अर्थ हुन्छ, खोला किनारको जात्रा । यहाँ बखुको अर्थ खोला किनार र मरःयाको अर्थ जात्रा हो । मुःया, सिन्ह्याको रुपमा मनाइने यस सात गाउँले जात्रालाई वैदिक तान्त्रिक पँजासँग जोड्ने हो भने अष्टमात्रिकाको जयजयकारको रुपमा लिन सकिन्छ । रुद्रायणी, ब्रम्हायणी, माहेस्वरी, वैष्णवी, महालक्ष्मी, इन्द्रायणी, कौमारी र सरस्वतीलाई अष्टमात्रिकाको रुपमा पूजा गर्ने गरिन्छ । यसैगरी भोजको सिलसिलामा गणपूजा गर्ने चलन पनि छ । गणेश, गंगा, काली, सिघिनी र व्याघिनीजस्ता पंचतत्वको प्रतीकका रुपमा अदुवा, बारा, खेपी, चपी, हिंला र पँला राख्ने गरिन्छ ।

**जात्राः**

सात गाउँले जात्रा खास गरेर अष्टमी, नवमी र दशमी गरी तीन दिन मनाइने गरिन्छ । पूर्वजको भनाइ अनुसार कीर्तिपुरको पूर्व खोकना, दक्षिणकाली, क्वार (हाल) बाट शुरु हुँदै आउने जात्राको क्रम सात गाउँले जात्राको रुपमा विशेषगरी कीर्तिपुरमा नगाउँ, पाँगा र कीर्तिपुर

गरी सातभन्दा बढी गाउँहरुमा सम्पन्न गर्ने गरिन्छ । नेवार बस्तीमा सम्पन्न गरिने यो जात्रा मल्लकालदेखि शुरु भएको विश्वास गरिन्छ ।

नगाउँमा माटोको भाँडो समाई काम्ने जात्राः

कीर्तिपुर र पाँगाबीच अवस्थित सानो गाउँ नगाउँमा मनाइने जात्रा माटो भाँडो समाई काम्ने जात्रा हो । सप्तमीमा छोयलाभू (पोलेको छोयला खाई भोज) गरिसकेपछि औपचारिक रुपमा जात्रा शुरु भएको मानिन्छ र भोलिपल्ट अष्टमीको दिन लाछिमा

राखेको बालकुमारीमा पूजाआजा गर्ने गरिन्छ । बेलुकीपखः बाजागाजाका साथ खटमा राखी बालकुमारीलाई पीठमा पुऱ्याइन्छ र राती बलिकासाथ विधिपूर्वक होमयज्ञ गरिन्छ। हरेक वर्ष यो जात्रामा एकपटकमा ५ जना गुठियारहरुलाई पंच तत्वको प्रति

कारात्मक रक्सी, दूध, रगत, दही र जल राखेको भाँडो समाउन लगाइन्छ । यसरी भाँडो समाएकाहरुलाई बन्धन धागोले चक्र बनाई गुभाजुले विभिन्न मन्त्रवाचन गरेपछि विस्तारै विस्तारै तिनीहरु भाँडोसहित काम्न थाल्छन् । मध्यराती गरिने यो जात्रा जाडोका कारण कामेको हो वा मन्त्रको कारण कामेको सोध गर्न बाँकी नै छ । गुभाजुले जब उनीहरुको हातको भाँडो लिने र धागोको बन्धनबाट छुट्टयाउँछ, नकाम्ने विश्वास गरिन्छ। अचम्मको कुरा त यो छ कि दूधको भाँडो बोक्ने एकजना मात्र काम्दैनन् । भोलिपल्ट पूजाआजा गरिसकेपछि बेलुकीपख बालकुमारीलाई बाजागाजासहित पुनः आफनै ठाउँमा ल्याउने गरिन्छ र सबैमिलेर पंक्तिभोजमा सामेल हुन्छ । दशमीको दिन भने गुठियारहरुवीच निर्णय गर्नुपर्ने कुरामा छलफल गर्ने र नयाँ सदस्यहरु थप्ने कार्यमा व्यस्त हुन्छन् ।

**पाँगामा विष्णुदेवी र बालकुमारी जात्राः**

पाँगा साविक विष्णुदेवी र बालकुमारी दुई गाविसहरु मिलाई बनेको गाउँ हो । हाल यो कीर्तिपुर नगरपालिकाका वडा नं. ९, १०, ११ र १२ वडाहरु अन्तर्गत पर्दछन्। जात्रा मनाउने सवालमा पाँगालगायत भत्केपाटी, लनगोल, इटागोल र भाजंगलसमेत यसै जात्रामा आवद्ध रही आएका छन् । जात्रा पीठसँग सम्वन्धित भएकोले जात्राको संचालन कार्यमा सना गुठी सक्रिय हुन्छन् । पाँगामा दुवाल गुठी १, महर्जन गुठी ३ (तः गुथि, चि गुथि र दे गुथि), खड्गी गुठी १ र कपाली गुठी १ रहेका



छन् । स्थानीय जात्रा कार्यमा गुठिहरुको आ-आफनै खालको जिम्मेवारीहरु रहेका हुन्छन् । विशेषगरी मूर्ति सुरक्षँ व्यवस्थापनमा कपाली, जात्रा संचालनमा महर्जन गुठि, गणपूजामा दुवाल गुठि, बलिपूजामा खडगी गुठि सक्रिय रहदै आएका छन् । सप्तमी छोयलाभूको दिन बालकुमारी पीठ देउखेलमा मण्ड म्ये (सानो राँगो) बलि दिने र गुठिहरुले प्रसादस्वरुप मासु भाग लिने, त्यसलगतै पाँगा लाछि अवस्थित विष्णुदेवी र बालकुमारी मूर्तिलाई खटमा राखिन्छ र बालकुमारी खटलाई सोही दिन वाजागाजासहित देउखेलस्थित पीठमा लाने गरिन्छ र रातभरी आगोबाली जाग्राम बस्ने गरिन्छ । भोलिपल्ट अष्टमीको दिन दुवै खटमा विहानसवेरैदेखि पूजा आजा गरिन्छ र साँझपख विष्णुदेवी खटलाई पनि भाजंगलस्थित पीठमा बाजागाजासाथ पुऱ्याइन्छ । सोही राती श्रेष्ठहरुद्वारा गणपूजा गरिसकेपछि दुवै पीठबाट पाँगाको देफल्चामा कसैले चाल नपाउनेगरी विना आवाज ल्याइपुऱ्याइन्छ । विहान

सवेरैदेखि उक्त ठाउँमा नवमीको दिन सिन्ह्याको रुपमा दर्शनार्थीहरुको भीड जम्मा हुन्छन् । गाउँभरीका विभिन्न समूहहरुको वाजागाजासहितको लामवद्ध पूजाआजा र गुन्जायमानले जात्राको रौनक बढाउँछ, यस दिन पनि बलि दिन चाहनेले बलि दिने गर्दछन् । करिव विहानको १२ बजेसम्ममा द्वारेपूजाको व्यवस्था हुन्छ, मतलब द्वारेपूजालाई अन्तिमपूजाको रुपमा मानिन्छ । त्यसपछि सो ठाउँबाट खट उठाई ढोकासीमा ल्याई पुऱ्याउने चलन छ । यसपछि खटलाई गाउँको विभिन्न टोलटोलमा घुमाइन्छ र अन्त्यमा लाछिमा साँझ मूर्तिवाहेक सम्पूर्ण सजावत विगार्ने काम हुन्छ । खटयात्राको समाप्ती हुन्छ ।

**कीर्तिपुरको इन्द्रायणी र गणेश जात्राः**

पाँगामा जस्तै सप्तमीको दिन छोयलाभू गरी अष्टमीको दिन कीर्तिपुर वडा नं. १ स्थित देवढोका पीठमा इन्द्रायणी र गणेशको खट लैजाने गरिन्छ। खटमा राखेको इन्द्रायणी र गणेशलाई विहानसवेरैदेखि पूजाआजा गरिसकेपछि सिन्हःयाको दिन बाजागाजासहित लस्करद्वारा टोल टोलमा घुमाइन्छ। हरेक साल गुठियारहरुको एकता र सक्रियताका कारण खटयात्रा बोक्ने जिम्मेवारी टोलटोलले वहन गर्दछन। परिणाम त कीर्तिपुरको विभिन्न टोल बाजागाजासहित परिक्रमा गर्न कुनै कठिनाइ हुँदैन ।

**नैकाप, सतुङगलको खटयात्रा तथा बोसिगाउँ र मच्छेगाउँको भाँडोजात्राः**

कीर्तिपुरको पश्चिमतिरको बल्खुखोला नजिक रहेको तीनथाना गाविसमा पर्ने दोभान पीठमा सात गाउँले जात्राको प्रतीकका रुपमा जात्रा संचालन हुन्छ । दशमीको दिन सिन्हयाको रुपमा अघिल्लो दिन आ-आफनो ठाउँबाट ल्याई पुऱ्याएका खट तथा भाँडाका मूर्तिलाई विधिपूर्वक पूजाआजापछि आ-आफनै गाउँमा फिर्ता लाने चलन छ । फिर्ता लगी आफनो ठाउँका टोलपरिक्रमापछि जात्रा समाप्त हुन्छ। बल्खुको जात्राको एउटा विशेषता के हो भने तालमा खटलाई नचाउने र आफूपनि सोही तालमा नाच्ने गरिन्छ। यसो गर्दा टाढा टाढाबाट हेर्न आउने दर्शकहरुको भीड बाक्लो पाइन्छ ।

**धार्मिक दृष्टिकोणः**

हिन्दुहरुका अनुसार अष्टमात्रिकालाई शक्ति पीठका रुपमा लिन सकिन्छ । मानव शरीरको सृष्टि पंचतत्वबाट बनेको कुरालाई हिन्दुहरु विश्वास गर्दछन् । आफनो शरीरलाई रोग र अन्य भयबाट मुक्त गरी जन्ममृत्युमा सन्तुलन होस, पाप, अकर्म जस्ता

नराम्रा कार्यहरु नगरुन् र मानिस सबैको एउटै बाटो जन्मपछि मृत्यु अवश्यमभावी छ भन्ने कुरा बोध गराउनु जात्राको धार्मिक दृष्टिकोण रहेको छ ।

**साँस्कृतिक दृष्टिकोणः**

नेवार वस्तीमा कार्य व्यस्तका वावजुद पनि जीवनलाई सन्तुलन कार्यमा राख्न समय समयमा गरिने साँस्कृतिक पर्वको रुपमा जात्रालाई पनि लिइन्छ। विशेषगरी यो जात्रा जाडोको समयमा मानिन्छ । धान काट्ने र गहुँ छर्ने कार्यको समाप्तीसँगै फुर्सदको समयमा मनाइने यो चाड कीर्तिपुरको ठूलो चाड मध्येमा पर्छ। गुठिलाई निरन्तरता दिनु र वर्षको एकचोटी हरहिसाबकिताव चुक्ता गर्नु यसको महत्वपूर्ण पक्षँ हो । यो चाड संचालनको लागि आवश्यक बाजागाजाहरुको व्यवस्थापनमा संस्कृतिको ठूलो हात छ । इन्द्रबाजा बजाउनको लागि मात्र पनि गुठिले कार्यकर्ताको व्यवस्था गरेको छ । संस्कृतिको नाममा मात्र यसको निरन्तरता भैरहेको छ । व्यक्तिगत वा समूहगतमा हालसम्म कसैले पनि यसको संरक्षण गरेको देखिदैन । बाँसुरी र धिमेबाजाको निरन्तरता र विकास भने आवश्यक भन्दा बढी नै भैरहेको देखिन्छ ।

**सामाजिक दृष्टिकोणः**

समाजमा रहेका विभिन्न वर्गहरु विना भेदभाव एकै ठाउँमा पूजा आजा गरी आफनो जीवन विताउने र गुठि कार्य, सहयोगी भावना, खट बोक्ने, मित्रता गाँस्ने र नातेदारहरु बोलाई भोज खाने परम्पराले बलियो सामाजिक आधार बनाएकोछ ।

**आर्थिक दृष्टिकोणः**

हिजोआज चाडको नाममा धेरै खर्च गर्ने चलन बढेको छ । यसैले आर्थिक दृष्टिकोणले खर्चालु देखिन्छ तैपनि यस पर्वलाई महोत्सवको रुपमा संचालन गर्ने हो भने आर्थिक पक्षँको सवल गर्ने तरिकाबारे सोच्नु जरुरी छ। स्थानीय चाडलाई आन्तरिक पर्यटनसँग जोडेर कार्य संचालन गर्ने हो भने आर्थिक लाभ पनि फलदायी नै हुनेछ ।

**वातावरणीय दृष्टिकोणः**

चाडपर्वको महत्व आफनै ठाउँमा हुन्छ । चाड पर्वको नाममा वातावरणमा हुने असन्तुलन कार्य जस्तै खानेकुराको खपत, ध्वनी प्रदुषण, जैविक तथा अजैविक वस्तुको खपत आदिलाई व्यवस्थापन गर्न सक्नुपर्दछ र सबैको कर्तव्य पनि हो ।

**शारीरिक क्रियात्मक दृष्टिकोणः**

चाडवाडको नाममा तयार गरिने विभिन्न किसिमका खानेकुरा सेवनले मानव स्वास्थ्यमा

**बाँकी पेज ६ मा**

# तेजपात प्रयोग कसरी गर्ने ?

खानाको स्वाद र बास्ना बढाउन तेजपात अर्थात् तेजपत्ताको प्रयोग गर्ने चलन पुरानै हो। सामान्यतया चिया वा तरकारीमा स्वादको लागि मसलाको रुपमा उपयोग गरिने तेजपात स्वास्थ्यको दृष्टिले पनि निकै फाइदाजनक हुन्छ ।

सुगन्धित स्वाद हुने यसको पातमा आवश्यक पोषक तत्व र खनिज हुन्छ । तेजपातमा भिटामिन ए, भिटामिन सी, आइरन, पोटासियम, क्याल्सियम र म्याग्नेसियम उच्च मात्रामा पाइन्छ । यसमा इन्जाइमहरू पनि हुन्छन्, जसले प्रोटिनलाई तोड्न र पाचन सुधार गर्न मद्दत गर्छन् । आयुर्वेदिक भाषामा यसलाई सिनामोम्मम् टमला भनिन्छ। नेपालमा रूखको पातलाई तेजपात र बोक्रालाई दालचिनी भन्ने गरिन्छ । दालचिनी भनेको फरक प्रजाति, सिनामम्मम् भेरम (पर्यायवाची सिनामम्मम् जेलेनिकम) हो । यो तराईदेखि मध्यपहाडी क्षेत्रमा पाइन्छ ।

के-केका लागि उपयोगी हुन्छ ?

आयुर्वेदमा तेजपातलाई स्वादको लागि मात्र नभई औषधिको रूपमा पनि प्रयोग गरिन्छ । यसलाई ज्वरो, रुघाखोकी, अपच, कब्जियत जस्ता समस्यामा औषधिको रुपमा प्रयोग गरिन्छ। छालासम्बन्धी रोग र कपालका लागि पनि यो उपयोगी हुन्छ। त्यस्तै घरमा झिंगा र साङ्ला हटाउन पनि प्रयोग हुन्छ ।

चियामा दैनिक तेजपात राखेर खाँदा मोटोपनको समस्याबाट बचाउनुका साथै रोगप्रतिरोधात्मक क्षमता पनि बढाउँछ ।

आधुनिक अनुसन्धान अनुसार तेजपात मधुमेहमा पनि प्रभावकारी देखिएको छ। सन् २०१६ मा जर्नल अफ बायोकेमिकल न्यूट्रिसनमा प्रकाशित शोधमा टाइप २ मधुमेहबाट पीडित व्यक्तिले तेजपात खानु उपयोगी हुने उल्लेख गरिएको छ। यसबाट बिरामीको रगतमा ग्लुकोजको मात्रा सामान्य बनाउन मद्दत गर्छ ।

त्यस्तै यसमा एन्टिहाइपरलिपिडेमिक इफेक्ट पनि भनिन्छ । यसले शरीरमा खराब कोलेस्टेरोल र अनावश्यक तरल पदार्थलाई घटाएर गुड कोलेस्टेरोल सुधार गर्न पनि मद्दत गर्छ ।

तेजपात एन्टिइन्फ्लेमेटरी गुणले भरपुर हुन्छ । यसमा हुने भिटामिन सीले दाँत र गिजालाई स्वस्थ राख्न मद्दत गर्छ र दाँत दुखाइबाट पनि राहत दिन्छ । बाथरोगमा बिरामीलाई यसको तेल प्रयोग गर्न सकिन्छ, जसले जोर्नीको दुखाइ कम गर्छ ।

तेजपातमा भिटामिन ए र सीका साथै फोलिक एसिड पनि हुन्छ । यसले पेटसम्बन्धी समस्या मुक्त गर्न मद्दत गर्छ। कब्जियत र एसिडिटीको समस्यामा तेजपातले औषधिकै काम गर्छ ।

यसबाहेक हृदयरोगको जोखिम कम गर्न र माइग्रेनसँग लड्न तेजपातले महत्वपूर्ण भूमिका खेल्छ। यसले एसिडिटी, डन्डीफोर, निद्रा नलाग्ने समस्या हटाउनुका साथै क्यान्सर जस्तो रोगमा राहत पुऱ्याउँछ।

कसले खान मिल्दैन ?

रगत पातलो गर्ने औषधि खाइरहेका व्यक्तिले तेजपात खानु हुँदैन । तेजपातको अत्याधिक प्रयोगले शरीर सुन्निने समस्या हुनसक्छ।

कहिले खाने ?

तेजपातलाई बिहान र बेलुका खान सकिन्छ । मधुमेह, मोटोपन, कोलेस्टेरोलको लागि तेजपात बिहान खाली पेटमा चिया बनाएर वा पाउडर बनाएर एक चम्चा खानुपर्छ । त्यस्तै पेट फुल्ने, एसिडिटी तथा ग्यासको समस्या हुनेले खानापछि खानुपर्छ।

कसरी प्रयोग गर्ने ?

खानासँगै पकाउँदा तेजपातको औषधीय गुण नष्ट हुन्छ। त्यसैले यसलाई खानेकुरा आधा पाकिसकेपछि वा पाक्न लागेपछि माथिबाट हाल्नुपर्छ । तर हामीकहाँ भने सुरुमा नै तेलमा हाल्ने चलन छ। स्वाद र बास्ना आउँछ तर त्यसमा भएको औषधीय गुण प्राप्त हुँदैन ।

# चिसोमा दीर्घरोगीलाई मर्निङवाक जोखिमपूर्ण

काठमाडौं । यतिबेला चिसो मौसम छ । मौसम परिवर्तनसँगै हाम्रो जीवनशैलीमा परिवर्तन आउँछ । वायुमण्डल हामीभन्दा केही माथि मात्रै घुमिराखेको हुन्छ । भौगोलिक बनोटका दृष्टिले काठमाडौं कचौरा जस्तो छ । जसका कारण यहाँको वायु वारपार हुन पाउँदैन । अहिलेको बढ्दो जनघनत्व, अव्यवस्थित शहरीकरण, अव्यवस्थित निर्माण, पुराना डिजेल इन्जिनहरु, कलकारखानामा पुराना मेसिन, धुवाँ फाल्ने मेसिन, जंगलमा लाग्ने डढेलोलगायतका कारण वायु प्रदूषण उच्च बिन्दुमा पुग्ने गर्दछ । अहिले यो बढ्दो क्रममै छ।

संसारमै काठमाडौं विश्वका उच्च प्रदुषणयुक्त शहरमा गनिन्छ। स्वीस वायु गुणस्तर मापन गर्ने कम्पनी आइक्यू एयरले काठमाडौंलाई तेस्रो प्रदूषित सहरको सूचीमा राखेको हो ।

अल्पकालीन असरः वायु प्रदूषण बढ्दै गयो भने भाइरलका ब्याक्टेरियल संक्रमण पनि बढ्दै जान्छन् । धुवाँ र धुलोका कणमा भाइरस, ब्याक्टेरिया टाँसिएर हाम्रो नाक या श्वासनलीको माध्यमबाट फोक्सोसम्म पुग्ने गर्छन् । फोक्सोको एयरस्याक्स अर्थात् फोक्सोको अन्तिम बिन्दुसम्म तिनले प्रवेश पाउँछन् । ब्याक्टेरियाको पहुँच फोक्सोमा पुगेपछि त्यसले संक्रमण फैलाउँछ। त्यस्तै श्वासनलीमा म्युकस अर्थात र्याल, त्यो पनि सुख्खा हुन्छ।

श्वासनली सुख्खा भएर घाँटी खसखस हुने, खोकी लाग्ने, रुघा लाग्ने, नाक सुख्खा हुने जस्ता समस्या देखा पर्छन् । भाइरल र ब्याक्टेरिया इन्फेक्सन भयो भने ज्वरो आउने, पहेँलो खकार आउने, खकारमा रगत देखिने, छाती दुख्ने लगायतका समस्या हुने गर्दछन् ।

दीर्घकालीन असरः वायु प्रदूषणको असर प्रत्यक्ष रुपमा नदेखिए पनि प्रत्येक १० जनामा १ जनाको मृत्युको कारण वायु प्रदूषण रहेको निष्कर्ष विश्व स्वास्थ्य संगठनले निकालेको छ। धूमपान कहिल्यै नगरेका व्यक्तिमा पनि क्यान्सर बढ्दो क्रममा छ। नेपालमा फोक्सोको क्यान्सर सर्वाधिक रहेको छ। त्यसको एउटा प्रमुख कारण वायु प्रदूषण हो भन्ने विभिन्न अध्ययनले देखाएका छन् । त्यस्तै लामो समयसम्म वायु प्रदूषण प्रभाव रह्यो धुवाँ धुलोका कणहरु स्वासनली हुँदै रगतसम्म पुग्न थाल्छन् र रगतका धमनी नसा साँघुरीन थाल्छन्। जसका कारण उच्च रक्तचाप हुने, हृदयघात हुने, स्टोक अर्थात पक्षघात लगायतका दीर्घकालीन समस्याको जोखिम वायु प्रदूषणले बढाउने गर्दछ। त्यस्तै बाँझोपनको समस्या बढाउने, सुगर बढाउने, कपालका रौंहरु झर्ने, छालामा चाउरी पर्ने, आँखामा संक्रमण हुने, हाडजोर्नी कमजोर हुँदै जाने, जस्ता समस्या वायुप्रदूषणले बढाउने गर्दछ । चिसो मौसम आफैंले नै संक्रमण बढाउँछ। श्वासनली साँघुरिने, रगतका नली खुम्चिन्छन्। त्यसैले रक्तचापले हृदयाघात र ब्रोङकाइटिसको जोखिम बढाउँछ। बालबालिका, बृद्धबृद्धा छातीमा चिसो गढेर अस्पताल पुगिरहेका हुन्छन् । त्यसैमाथि वायुप्रदूषणले यस्ता समस्यालाई अझ बढाउने काम गर्दछ ।

बिहानीको समयमा धुवाँ धुलोका कण थेग्रिएर बस्छन्। जमिनको केही सतहमाथि मात्रै यो प्रदूषण रहेको हुन्छ र श्वाससप्रस्वासको माध्यमबाट हाम्रो शरीरभित्र यसले सहजै प्रवेश पाउँछ। जसले भाइरल संक्रमणको सम्भावना बढेर जान्छ भने बिहानको समयमा चिसोले गर्दा कठ्याङग्रिने समस्या, चिसोका कारण स्वास्थ्यमा पर्ने नकारात्मक असर धेरै पर्ने भएकाले जाडोको बेलामा मर्निङवाक नगर्नु नै राम्रो मानिन्छ।






TIMES

## सात

कतिको हानि गर्न सक्तछन् र शरीरलाई ती खानेकुराहरुले कति पोषण दिन सक्छन् भन्ने कुराको ख्याल गर्दै भोजको व्यवस्थापन गर्न सकेमा अझ फलदायी हुने देखिन्छ । सात गाउँले जात्राको विशेष परिकारको रुपमा मासुको झोल जमाउनु अर्थात थलथले, यो नेवारी खानाको विशेष प्रकार हो । यसवाहेक अन्य विभिन्न किसिमका खानेकुराहरुमा कार्वोहाइड्रेट, प्रोटिन, बोसो चिल्लो, भिटामिन खनिज आदिबारे पनि ध्यान दिनु जरुरी हुन्छ । चाडमा सेवन गरिने अत्यधिक मध्यपानले त झन स्वास्थ्यमा नकारात्मक असर नै गर्छ । भारी खटलाई उठाउँदै सार्दै टोल परिक्रमा गर्दा गुठियारहरुको शारीरिक स्फूर्ति पनि त्यतिकै बढ्ने विश्वास गर्न सकिन्छ ।

**मानवीय दृष्टिकोणः**

सात गाउँले जात्राले मानवीय दृष्टिकोणको पहिचान दिन पनि मद्दत गर्छ । यो चाडमा गुठिद्वारा आयोजना गरिने भोजमा पुरुष र महिलाको समान सहभागिताले एकातिर समानताको अधिकारको वकालत गर्न सहयोग गरिरहेको छ भने अर्कोतिर बालबच्चादेखि बुढापाकासम्मको सहभागिताले कसैको मानवअधिकार हनन नभएको इंगित गर्दछ ।

**लैगिंक दृष्टिकोणः**

अष्टमात्रिकाको आराधनाले नारीशक्तिमाथि विस्वास गरेको ठहर्छ । प्राचीनकालमा नारीहरुको वाहुल्यता बढी भएको छ र नारी पनि एक शक्ति हो, संयम हो भन्ने कुरा यो चाडले स्पष्ट गरेको छ ।

वर्गिय दृष्टिकोणः

सातगाउँले जात्रालाई वर्गिय रुपमा हेर्दा अलिकति फरक पाउन सकिन्छ । विशेषगरी कामदार वर्गले हरेक साँस्कृतिक कार्यहरुलाई निरन्तरता दिएको देखिन्छ । साँस्कृतिक झमेलामा प्रँय:जसो टाठाबाठा फसेको देखिदैन । वरु उनीहरु मख्ख परेर आनन्द लुट्ने गर्दछन् ।

**शारीरिक दृष्टिकोणः**

जात्रामा बोकिने खट कुनै तौल उचाल्ने धावकको अभ्यास भन्दा कम हुँदैन । त्यसैले कामदार वर्गले खट बोक्नु भन्दा पनि जो वार्षिक वा प्रायः जसो सक्रिय जीवन बिताउँदैन, त्यस्ता व्यक्तिले खटको तौल उचाल्ने र बोक्ने प्रयास गरेमा शारीरिक दृष्टिकोणले उ फुर्तिलो र स्वस्थ हुन मद्दत पुग्दछ ।

निश्कर्षः

कुनै पनि चाडपर्वलाई चाहे सात गाउँले जात्रा होस् या अन्य, मानव जीवनको एक भाग हो भन्ने कुरा विसर्नु हुँदैन । त्यसलाई एकपाक्षिय दृष्टिकोणले ठिक बेठिक भन्नु भन्दा हरेक दृष्टिकोणले पहिचान गर्न खोजेमा

# अर्को महिनाबाट महिला सुपर लिग हुने

काठमाडौं । एन्फा महिला सुपर लिग अर्को महिना सुरु हुने भएको छ । अखिल नेपाल फुटबल संघ (एन्फा) पदाधिकारी र सुपर लिग खेल्ने ५ टोलीका प्रतिनिधिबीच मंगलवार भएको संयुक्त बैठकले पुस १८ देखि माघ १६ गतेसम्म सुपर लिग गर्ने निर्णय भएको एन्फाले जनाएको छ।

यसअघि भएको महिला लिगको शीर्ष ५ रहेका मध्ये पाँचौं स्थानमा रहेको कोशी प्रदेशको सट्टा छैटौं स्थानको बागमती युथ क्लबले सुपर लिग खेल्ने एन्फा प्रवक्ता सुरेश शाहले जानकारी दिए ।

बागमतीसहित शीर्षस्थानको एपिएफ, दोस्रो त्रिभुवन आर्मी फुटबल क्लब, तेस्रो नेपाल पुलिस क्लब र चौथो वालिङ नगरपालिकाका प्रतिनिधिको बैठकमा सहभागिता रहेको शाहले बताए ।

सुपर लिगका खेल अधिकाशं खेल एन्फा कम्प्लेक्स र फाइनलसहितका केहि दशरथ रंगशालामा हुने बताइएको छ। सुपर लिगमा लिगको अंक नजोडिने एन्फाका प्रतियोगिता निर्देशक सञ्जिव मिश्रले जानकारी दिए।

एन्फाले यसपटक छनोट, लिग र सुपर लिगमा महिला लिग सन्चालन गरेको हो। महिला लिगको ३ चरणमा गरि कुल ९० खेल हुनेछन् ।

# परमाणु युद्ध भयो भने के सुरक्षित होला विश्व ?

एजेन्सी । अहिले विश्वमै युद्धको माहोल बन्दै गइरहेको छ । साथै अहिले रुस, युक्रेन र मध्यपूर्वमा भएको हिसात्मक घटना र सिरियामा भएको तख्ता पलटको घटना र अमेरिकी राष्ट्रपति ट्रम्पको फ्रान्स भ्रमणका क्रममा युक्रेनी राष्ट्रपति जेलेन्सकीसँगको भेटवार्ता पछि रुसी राष्ट्रपति पुटिनबाट आएको प्रतिक्रियाका कारण परमाणु युद्धको खतरा बढ्दै गएको आकलन गरिएको छ । यसै बीच एक अध्ययनले आणविक युद्धले विकिरण, गर्मी र विस्फोटको प्रभावबाट मृत्यु मात्र नभई खाद्यान्न आपूर्तिमा समेत गम्भीर असर पार्ने देखाएको छ ।

आणविक युद्ध पछि पृथ्वीमा सबैभन्दा सुरक्षित स्थानः रूस र युक्रेन बीच युद्ध रोकिने कुनै संकेत छैन । यी दुईबीचको युद्ध भएको झण्डै दुई वर्ष दश महिना बितिसकेको छ । युक्रेनले हालै गरेको मिसाइल आक्रमणपछि दुई देशबीचको तनाव बढेको छ । त्यसको जवाफमा रुसले पनि यस्तो कदम चाल्यो कि यस युद्धमा रुसले पहिलो पटक इन्टरकन्टिनेन्टल ब्यालिस्टिक मिसाइल प्रयोग गरेको थियो ।

यो लामो दुरीको मिसाइल आणविक वारहेड बोक्न पनि सक्षम छ । युक्रेनको गुप्तचर निकायले रुसले ठूलो हमला गर्न सक्ने आशंका व्यक्त गरेको छ । यसको अर्थ रुसबाट आणविक आक्रमणको जोखिम बढेको छ । अहिलेको उथलपुथलमा सारा विश्वको नजर टिकेको छ । यदि रुसले युक्रेनमा आणविक हमला गऱ्यो भने के तेस्रो विश्वयुद्ध सुरु हुन्छ ? यदि यस्तो भयो भने, संसारका ती कुन देशहरू हुनेछन् जहाँ मानिसहरू सुरक्षित हुनेछन ?

एशियाको हालत के होला ?

तेस्रो विश्वयुद्धको अवस्था आयो भने दक्षिण एसियाली देशहरूमा जताततै विनाश हुनेछ । पाकिस्तानसँग आणविक हतियार छ । भारत पनि परमाणु शक्ति सम्पन्न देश हो । त्यसपछि भारतको अर्को छिमेकी राष्ट्र चीन पनि कसैभन्दा कम छैन । यसको मतलब, युद्धको अवस्थामा, स्थिति धेरै खराब हुनेछ । यो क्षेत्र सबैभन्दा संवेदनशील हुनेछ । यदि विश्वयुद्ध भयो भने, यस क्षेत्रमा ठूलो संख्यामा मानिसहरू नष्ट हुनेछन् । जे होस्, दोस्रो विश्वयुद्धमा अमेरिकाले जापानका दुई सहरमा आणविक बम खसालेको भयावहता बिर्सन गाह्रो छ ।

विस्फोटबाट बाँचेकाहरू भोकले मर्नेछन् ।

इकोनोमिक टाइम्सको एक रिपोर्ट अनुसार नेचर फुडमा हालै प्रकाशित एक अध्ययन अनुसार आणविक युद्धले विकिरण, ताप र विस्फोटको प्रभावबाट मृत्यु मात्र नभई खाद्यान्न आपूर्तिमा पनि गम्भीर अवरोध ल्याउनेछ । वायुमण्डल, महासागर र अन्तर्राष्ट्रिय व्यापारमा आएको परिवर्तनका कारण विश्वका ६ अर्ब ७ करोड मानिस भोकमरीको सिकार हुन सक्छन् । यस अध्ययनमा आणविक युद्धपछिको वायुमण्डलीय र कृषिमा पर्ने असरको विश्लेषण गरिएको छ । जसमा सामूहिक भोकमरीबाट बच्न सक्ने देशहरुको पहिचान गरिएको छ । जसमध्ये अर्जेन्टिना, ब्राजिल, उरुग्वे, पाराग्वे, अष्ट्रेलिया, आइसल्याण्ड र ओमानको नाम शीर्षमा छ । युद्ध पछि पनि यी देशहरूमा आवश्यक खाद्यान्न आपूर्ति जारी रहनेछ ।

भोकमरीको जोखिममा क्षेत्रहरू

विश्वका धेरै जनसंख्या भएका क्षेत्रहरू गम्भीर रूपमा प्रभावित हुनेछन् । अध्ययनका अनुसार अमेरिका, क्यानडा, अधिकांश युरोप र रुसले भयंकर अनिकालको सामना गर्नुपर्नेछ । यी देशहरूको अधिकांश जनसंख्या भोकले मर्न सक्छ । उदाहरणका लागि, अमेरिकाको ढड प्रतिशत जनसंख्या (लगभग ३०० मिलियन मानिसहरू) आणविक युद्ध पछि भोकले मर्न सक्छ । त्यहाँ केही क्षेत्रहरू छन् जुन पूर्ण भोकमरीको सामना गर्दैनन्, तर तिनीहरूको क्यालोरी खपत एकदमै कम हुनेछ । यी क्षेत्रहरूमा मानिसहरूको वजन घट्नेछ र तिनीहरूको गतिविधिहरू नगण्य हुनेछन् । किनभने तिनीहरूसँग खानको लागि पर्याप्त खाना हुनेछैन ।

आणविक विस्फोट को समयमा सुरक्षा

साइप्रसको निकोसिया विश्वविद्यालयबाट एउटा छुट्टै अध्ययनले आणविक विस्फोटबाट बच्ने उपायहरू पत्ता लगाएको छ । अध्ययनले पत्ता लगाएको छ कि यदि त्यहाँ ७५० किलोटन परमाणु विस्फोट (जुन नागासाकी बमको आकारको तीन गुणा हो) भवनमा आश्रय लिनको लागि सबैभन्दा राम्रो ठाउँ बलियो कोठा थियो । आश्रय लिने ठाउँ ढोका र झ्यालबाट सकेसम्म टाढा छ । आदर्श स्थान कोठा को कुना हो ।

बढ्दो तनावका कारण आणविक खतरा

बढ्दो भूराजनीतिक तनावले आणविक जोखिममा योगदान पुऱ्याउँछ । हालका घटनाक्रमले विश्वव्यापी डर बढाएको छ । पूर्व रुसी राष्ट्रपति दिमित्री मेदवेदेवले रुसको नयाँ एन्टि-ब्यालिस्टिक मिसाइलले पश्चिमी देशहरूको रक्षा प्रणालीलाई नष्ट गर्न सक्ने चेतावनी दिएका छन् ।

सम्भावित सुरक्षित स्थान

आणविक युद्धको घटनामा, केही देशहरू अनिकालबाट कम प्रभावित हुने अपेक्षा गरिन्छ । यी देशहरूलाई सम्भावित शरणस्थलको रूपमा पहिचान गरिएको छ ।

अ न्टा र्क टि का : अन्टार्कटिकाको कम रणनीतिक महत्त्व छ, यसलाई आणविक युद्धको समयमा सबैभन्दा सुरक्षित स्थानहरू मध्ये एक बनाउँछ । यसको विशाल र अविकसित भूमिले हजारौं शरणार्थीहरूलाई समायोजन गर्न सक्छ ।

आइसल्याण्डः आइसल्याण्ड यसको शान्ति र तटस्थ अडानको लागी परिचित छ । यसको भौगोलिक स्थितिले परमाणु युद्धको अवस्थामा यसलाई सुरक्षित राख्छ ।

न्यूजील्याण्डः यसको तटस्थ विदेश नीति र हिमाली भूभागको कारण, न्यूजील्याण्डले सैन्य खतराहरूबाट प्राकृतिक सुरक्षा प्रदान गर्दछ । यसले यसलाई सम्भावित सुरक्षित स्थान बन( ाउँछ ।

स्विट्जरल्याण्डःयो देश यसको लामो समयदेखि तटस्थताको लागि परिचित छ । स्विट्जरल्याण्डको भूभागले आणविक युद्धको अवस्थामा यसलाई सुरक्षित विकल्प बनाउँछ ।

ग्रीनल्याण्ड, इन्डोनेसिया र टुभालुः यी देशहरू भौगोलिक रूपमा टाढा छन् र राजनीतिक रूपमा तटस्थ छन्, उनीहरूलाई विश्व युद्धको समयमा कम सम्भावित लक्ष्य बन(ाउँदछ । विशेष गरी टुभालुमा सीमित पूर्वाधार छ, जसले यसलाई सैन्य कारबाहीका लागि कठिन लक्ष्य बनाउँछ ।

अर्जेन्टिना, चिली र उरुग्वेः यी दक्षिण अमेरिकी देशहरूले आणविक युद्ध पछि भोकमरीबाट बच्ने सम्भावना बढी हुन्छ किनभने तिनीहरूसँग प्रशस्त बालीहरू र अपेक्षाकृत स्थिर पूर्वाधारहरू छन् ।

# चेल्सीको रोमान्चक जित, आर्सनल रोकियो



एजेन्सी - इंग्लिस प्रिमियर लिगमा आइतवार चेल्सी विजयी भएको छ । अर्को खेलमा बर्नमथले इप्स्विच टाउनलाई २-१-ले हरायो । आर्सनलले फुलहमसँग १-१ को बराबरी खेलेको छ। लेस्टर सिटी र ब्राइटनबीचको खेल २-२ को बराबरीमा टुंगिएको छ।

कोल पाल्मरले पेनाल्टीमा २ गोल गरेपछि चेल्सीले टोटनहम ४-३ गोलले हराएको हो । खेलमा २-० को अग्रता जोगाउन टोटनहम असफल रह्यो। पाचौं मिनेटमा डोमिनिक सोलाङ्केले गोल गरे । डेजान कुलुसेभस्कीले गोल गरेपछि टोटनहमले ११ मिनेट भित्र २-० को अग्रता बनायो । तर त्यो अग्रतालाई जाडोन सान्चोले घटाए । उनले १७औं मिनेटमा चेल्सीका लागि गरे।

पाल्मरले ६१औं मिनेटमा प्राप्त पेनाल्टीमा गोलमा परिणत गरेपछि खेलमा २-२ को बराबरी भयो। एन्जो फर्नान्डेजले ७३औं मिनेटमा गोल गर्दै चेल्सीले पहिलो पटक अग्रता बनायो ।

पाल्मरले ८४ औं मिनेटमा पोनाल्टीबाट अर्को गोल गरेपछि चेल्सी थप मजबुत बन्यो । इन्ज्युरी समयको छैटौं मिनेटमा सन ह्युङ-मिनले गोल फर्काए पनि टोटनहमका लिगमा सातौं हार टरेन । यो जितपछि चेल्सी १५ खेलमा ३१ अंकसहित लिगको दोस्रो स्थानमा उक्लिएको छ । तेस्रो स्थानको आर्सनलको २९ अंक छ।

समान खेलमा २३ अंकका साथ फुलहम १० औं र टोटनहम २० अंकसहित ११औं स्थानमा छ । १ खेल कम खेलेको शीर्ष स्थानको लिभरपुलको ३५ अंक छ ।

# क्रिकेटर ब्रायन लारा नेपाल आउने

काठमाडौं । वेष्टइण्डिजका पूर्व कप्तान एवम् लेजेण्डरी क्रिकेटर ब्रायन लारा नेपाल आउने भएका छन् । नेपाल प्रिमियर लिग आयोजक समेत रहेको नेपाल क्रिकेट संघ (क्यान)ले लारा यही एनपीएलकै सन्दर्भमा नेपाल आउन लागेको जनाएको हो ।

'ब्रायन लारा यो हप्ता भित्र आइपुग्ने कुरा छ । उनी अहिले भइरहेको एनपीएल हेर्न आउन लागेका हुन्' क्यानका प्रवक्ता छुम्बी लामाले भने, 'विश्वकै लेजेण्ड क्रिकेटर आएर नेपाली क्रिकेट हेर्दा र अबजर्भ गर्दा नेपाली क्रिकेटबारे संसार भर सन्देश जाने अनी क्यान र नेपाली क्रिकेटलाई पनि केही सुझाव दिने लगायत कुराहरु हुन्छ । फाइनलसम्म बस्ने नबस्ने निश्चित छैन । त्यो आएपछि पछि थाहा हुन्छ।' लाराको आगमनले प्रतियोगिताले थप नयाँ उचाइ लिने क्यानको भनाइ छ । उनी पहिलोपटक नेपाल आउन लागेका हुन् ।

यसअघि उनले गतवर्ष नेपाली क्रिकेट टोली टी-२० विश्वकपमा छनोट हुँदा बधाइ दिँदै उनले आफू नेपाल आउन चाहेको बताएका थिए । नेपाल विश्वकपमा छनोट भएको केही समयपछि एक नेपाली क्रिकेट फ्यानसँगको ट्वीट सम्वादमा उनले नेपाली टोलीको प्रशंसा गरेका थिए ।

त्यसपछि उनले ट्वीट गर्दै नेपाली टोलीको खेल चमत्कारिक रहेको भन्दै बर्मुडामा खेल हेर्दा नै आफू प्रभावित भएको बताएका थिए । लाराले वेस्टइन्डिजका लागि १३१ टेस्टमा झण्डै १२ हजार रन बनाएका छन् भने २९९ ओडिआई खेल्दा १० हजारभन्दा धेरै रन बनाएका छन् ।

उनले वेस्टइन्डिजका लागि सन् २००४ को च्याम्पियन्स ट्रफी समेत जितेका छन् । उनी क्रिकेट जगतमा 'द प्रिन्स' उपनामले परिचित छन् ।

## भक्तपुरका

भक्तपुर नगरपालिका वडा नं ७ महेश्वरीस्थित महेश्वरी खेल मैदानमा हुने जानकारी गराए । भक्तपुर महोत्सव अर्न्तगत मुख्य ३२ वटा विभिन्न स्थानमा प्रर्दशनी हुने र त्यसमध्ये भक्तपुर नगरपालिका वडा ७ महेश्वरी खेल मैदानमा व्यापार मेला पनि एक भएको उनले बताए ।

भक्तपुर नगरपालिका वडा नं ७ का वडा अध्यक्ष एवं आयोजक भक्तपुर युवा टिमका सल्लाहकार उकेश कवांले सिंगो भक्तपुर महोत्सवको मुख्य आयोजक भक्तपुर नगरपालिका भए पनि उपयुक्तता अनि आवश्यकता अनुसार नगरपालिकाले विभिन्न संस्थाहरुलाई कामको जिम्मेबारी दिइएको जनाए । त्यस अनुसार महेश्वरी खेल मैदान भक्तपुर नगरपालिका वडा नं ७ मा परेकाले महेश्वरीमा हुने व्यापार मेलाको संयोजन वडास्थित भक्तपुर युवा टिम गोल्मढी भक्तपुरलाई दिएको उनले स्पष्ट पारे । त्यस अनुसार टिमले तयारी तीव्र पारेको उनले जनाए ।

मेलाको सम्पूर्ण खर्च र आम्दानी आयोजक टिम भक्तपुर युवा टिमले नै गर्ने जनाइएको छ । आयोजक टिमका संस्थापक अध्यक्ष एवं सल्लाहकार विश्वराम कवांले भक्तपुर युवा टिमले व्यापार मेला आयोजकको रुपमा जिम्मेवारी वहन गर्ने मौका पाएकोमा गर्वको महशुश गरे । उनले यसका लागि आवश्यक प्रक्रिया पूरा गरी सकिएको जानकारी पनि गराए ।

मेलास्थलमा केही दिन अगाडिबाट नै स्टल निर्माण लगायत अन्य कार्यको तयारी थालिसकेको छ । अहिले पनि त्यहाँ दैनिक धमाधम स्टलको लागि कामहरु भइरहेका छन् । आयोजक समितिका सचिव रामेश्वर मचामसीले व्यापार मेलामा झण्डै सय स्टल रहने र तीमध्ये ८० प्रतिशत स्टलहरु अगाडि नै बुकिङ भइसकेको जानकारी गराए । अब हामीसँग सिमित सिट मात्रै बाँकी छन्, उनले भने । स्टलको साइजअनुसार न्यून शुल्क लिएर व्यापारीहरुलाई स्टल उपलब्ध गराइने जानकारी उनले गराए । व्यापार मेलाको संयोजन भने केशव कवांले गरेका छन् ।

व्यापार मेलामा दैनिक जीवनमा प्रयोगमा आउने उपभोग्य सामाग्रीहरु, विभिन्न प्रकारका लत्ताकपडाहरु, खाद्यान्न, अटोमोबाइल, जुत्ताहरु, कृषि तथा हस्तकलाका सामाग्रीहरु प्रदर्शनी, सांस्कृतिक, व्यापार तथा पर्यटकीय सामाग्रीहरुको स्टलहरु हुने छन् । त्यसैगरी महोत्सवमा विक्री हुने सामानहरु विशेष छुटमा हुने जनाइयो । मनोरञ्जनका लागि महोत्सवमा बालउद्यान, रोटे पिङ, ड्रागन, नाउ, मिनी बन्जी जम्प, मिकी माउस, ट्रेम्पालिङ, स्करपियो आदिका साथमा राष्ट्रिय, अन्तराष्ट्रिय, स्थानीय कलाकारहरुको हाँस्यव्यङ्ग्य तथा गीत गायनको बेजोड प्रस्तुति प्रत्येक दिन रहने जनाइयो । महोत्सवमा काठमाडौं उपत्यकाका काठमाडौं, भक्तपुर, ललितपुर, काभ्रेलगायत विभिन्न जिल्लाका वासिन्दाहरुले समेत लाभ लिन सक्ने छन् ।

पत्रकार सम्मेलनको सहजिकरण आयोजक भक्तपुर युवा टिमका कार्यसमिति सदस्य सुरेश कवांले गरेका थिए । २०५४ सालपछि भक्तपुरले व्यापक रुपमा दोश्रो पटक भक्तपुर महोत्सव गर्न लागेको हो । महोत्सव अन्तर्गत भक्तपुर नगरपालिकाका वडा नं १ देखि १० सम्मकै टोलटोलहरु महोत्सवमय हुने जनाइएको छ । यसका लागि नगरका ३२ स्थानँहरुमा छुट्टाछुट्टै कार्यक्रम हुने जनाइएको छ ।







## संसद....

जस्तो प्राथमिक क्रम निर्धारण गरिएको पनि छैन । करिब एक दर्जन विधेयक पाइपलाइनमा छन् । तर अहिले संख्या पनि यति भनेर निकालिएको छैन', उनी भन्छन्, 'सम्बन्धित मन्त्रालय र निकायहरूबाट कानुन बनाउनुपर्ने र संशोधन गर्नुपर्ने धेरै प्रस्ताव आउने क्रम भने जारी छ ।'

कानुन निर्माण गर्ने प्रमुख थलो संसद् अहिले छैन । दर्जनौं कानुन निर्माण तथा संशोधन गर्नुपर्ने भए पनि सरकारले हिउँदे अधिवेशन बोलाउने तयारीसमेत अघि बढाएको छैन । सभामुख घिमिरे यसमा पनि सांसदहरूलाई नै दोषी देख्छन् । मंसिर १८ गते ललितपुरमा भएको समिति सभापतिहरूसँगको अन्तरसंवादमा उनले हिउँदे अधिवेशनका लागि सांसदहरू नै तयार नदेखिएको बताए ।

'आगामी संसद् अधिवेशन कहिले बोलाउने भन्ने विषयमा सांसदहरूको भूमिकामा पनि निर्भर हुन्छ र हुनुपर्छ', उनले भने, 'तर सांसदहरू नै तयार छैनौं । संसद्मा पेस भएका विधेयकहरूलाई फूल हाउसमा लैजाने गरी तयारी गरी संसद् अधिवेशन छिटो बोलाउन दबाव दिन सक्छौं ।' त्यसो त सभामुख घिमिरेको भनाइ केही हदसम्म सत्य देखिन्छ । किनभने मिनी संसद् भनिने संसदीय समितिहरूबाट विधेयकहरू गएपछि मात्र संसद्ले बिजनेश पाउने हो । तर सांसदहरू नै उपस्थित नहुँदा पछिल्लो पटक धेरैवटा समितिका बैठक कोरम नपुगेर बस्न नसकेको तथ्य बाहिर आएको छ । सुनुवाइ समिति सभापतिसमेत रहेकी कांग्रेस सांसद ईश्वरीदेवी न्यौपाने भने निरन्तरजसो समिति बैठक बसिरहेको जिकिर गर्छिन् । विधेयकहरू सकेसम्म छिटो पास गरेर पठाउने प्रयासमै समितिहरू रहेको उनको बुझाइ छ ।

'समितिका बैठक बसिरहेकै छन् । हाउसका लागि बिजनेस समितिहरूबाट विधेयक जानु नै हो । त्यसकारण माननीयहरूले त त्यो भूमिका खेलिराख्नु नै भएको छ', उनी थप्छिन्, 'हाउस बोलाउने कुरा हाम्रो होइन तर विधेयकहरू भरसक पास गरेर पठाउने प्रयासमै छौं ।' माओवादी प्रमुख सचेतक हितराज पाण्डे धेरैवटा कानुन निर्माण एवं संशोधन गर्नुपर्ने भएकाले छिटो संसद् अधिवेशन बोलाउनुपर्नेमा जोड दिन्छन् । त्यसका लागि आफूहरूको सभामुखसँग छलफल तथा संवाद समेत भइरहेको उनी बताउँछन् ।

सरकारको नेतृत्व गरिरहेका एमालेका लागि भने संसद् अधिवेशन बोलाउने वेला नै भइसकेको छैन । एमाले प्रमुख सचेतक महेश बर्तौला विगतको अभ्यासअनुसार पुसको मध्यसम्म संसद् अधिवेशन सरकारले बोलाउने बताउँछन् । 'विगतको अभ्यासका आधारमा पुसको मध्यसम्म संसद्को हिउँदे अधिवेशन बोलाउने काम हुन्छ', सभामुखले सांसदहरूलाई लगाएको दोषबारे उनले भने, 'त्यो उहाँले संसदीय कामकुराबारे भन्नुभएको होला ! अरू होइन ।'

विपक्षीहरू भने संसद् अधिवेशन चाँडो बोलाउनुपर्ने पक्षमा छन् । आवश्यक परे विशेष अधिवेशनको माग गर्ने पक्षमा उनीहरू देखिन्छन् । प्रमुख प्रतिपक्षी दल माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले सोमबार मात्रै सरकार नै संसद् पर धकेल्न लागिपरेको सूचना आफूले पाएको सुनाउँदै छिटो हिउँदे अधिवेशन आह्वान गर्नुपर्ने मत राखे । थप ढिलाइ गरे विशेष अधिवेशनको माग गर्न विपक्षी दलहरू एकजुट रहेको बताए ।

'यो सरकारले प्रतिनिधिसभा बैठक सकेसम्म धकेल्न बल गर्दै छ भन्ने हामीलाई सूचना प्राप्त छ', राष्ट्रिय कर्मचारी महासंघको कार्यक्रमलाई सम्बोधन गर्ने क्रममा उनले भने, 'हामीले जरुरी पर्‍यो भने विशेष अधिवेशन बोलाएर संघर्षको सुरुवात सदनबाट गरिनेछ। एजेन्डा सेट सदनबाट गरिनेछ। ती एजेन्डाको आधारमा सडकमा लाखौं जनतासँग मिलेर प्रतिक्रियावादीको तमाम षड्यन्त्र चकनाचुर पार्न सक्ने तागत हामीसँग छ। हामी प्रतिपक्षी जति सबैले त्यो अठोट लिएका छौं।' अर्का विपक्षी दल रास्वपा पनि संसद् अधिवेशन ढिलाइ भए विशेष अधिवेशन माग गर्ने पक्षमा छ । रास्वपाले गत कार्तिकमै प्रतिनिधिसभाको विशेष अधिवेशन माग गरेको थियो ।

अब धेरै ऐन कानुन निर्माण तथा संशोधन गर्नुका साथै छलफल गर्नुपर्ने कैयौं विषय भएकाले विगतको भन्दा अझ चाँडो हिउँदे अधिवेशन बोलाउनुपर्ने रास्वपा प्रमुख सचेतक निशा डाँगी

## मध्यपुर....

गराई सो समयमा पर्यटकको आगमन गराउने वस्तुगत उद्देश्य रहेको छ ।

थिमिको शंखधरचोक देखि नगदेश र बोदे हुँदै तिगनिको नीलबाराही स्थानसम्मका परम्परागत बस्तीक्षेत्रलाई महोत्सव प्रदर्शनी स्थलको रूपमा प्रस्तुत गरिनेछ । जहाँ करिव ७५ स्थानमा विभिन्न कार्यक्रमहरु भइरहन्छन । यसको व्यवस्थापनको लागि टोल टोलमा सघसंस्थाहरुलाई जिम्मेवारी प्रदान गरिने उनको भनाइ छ ।

टिगनी बजी (चिउरा)लाई जीवन्तता दिने

मध्यपुरको टिगनीको परम्परागत शैलीमा चिउरा कुट्ने प्रविधि र उत्पादनलाई जीवन्तता प्रधान गरिने नगर प्रमुख श्रेष्ठले जनाए । विगत ३५ वर्ष देखि लोप भएको टिगनी बजीको इतिहास किताबमा मात्रै सिमित भएको उल्लेख गर्दै उनले यस महोत्सव मार्फत टिगनी बजीको पुस्तान्तरण गरिने जनाए ।

टिगनी बजीको उत्पादन विधि सहित महोत्सवमा प्रदर्शनी गरिने र त्यसलाई जीवन्तता समेत प्रदान गरिने नगरप्रमुख श्रेष्ठको भनाइ छ ।

उनले युवा पुस्तामा यो परम्परालाई पुस्तान्तरण गर्न यस महोत्सवमा पदर्शनी गरिने र उत्पादन गरिने छ । त्यसको लागि आवश्यक पुराना औजार हरुको खोजीनिती गरेर मर्मत कार्यलाई अघि बढाएका जानकारी दिए । टिगनीमा परम्परागत शैलीमा चिउरा कुट्ने, बोदे र दिगुलीमा जिब्रो छेंडेने जात्राको डमी प्रदर्शन, दिग्लीमा ५ फिट अग्लीको माटोको सुकुन्दा प्रदर्शनी, दिगुलीमा माटोको हिटरको ढोका निर्माण, नेवारी संस्कृतिमा जन्मदेखि मृत्यु र विभिन्न चाडपर्व र अवसरमा खाने भोजको परिकार प्रदर्शन, बालकुमारीमा गेडागुडीको प्रदर्शन, बुद्धको अस्तुधातु, लिच्छवीकालदेखीको मुद्रा प्रदर्शनी र दैनिक जीवनमा प्रयोग हुने माटोका भाँडाकुँडाको जीवन्त प्रदर्शनी क्षेत्र एवम् सम्पदाहरु महोत्सवका प्रमुख आकर्षणको रुपमा रहेको उनले जानकारी दिए ।

## चौतारी....

रहेका छन्।

गठबन्धनले प्रदेश र जिल्ला तहमा पनि जिम्मेवारी बाँडफाँड गरेको छ। कोशी, मधेस, कर्णाली र उपत्यकाका अध्यक्ष प्रेस चौतारीले लिनेछन् भने बागमती, गण्डकी, लुम्बिनी, सुदूरपश्चिम, एसोसिएट, र प्रतिष्ठान अध्यक्ष प्रेस युनियनले पाउने सहमति भएको छ।

अर्कोतर्फ महासंघमा नेपाली कांग्रेस निकट प्रेस युनियनका विद्रोही पक्षधरसँग नेकपा माओवादी केन्द्र निकट प्रेस सेन्टर नेपाल सहितले चुनावी गठबन्धन गरेको छ । प्रेस युनियनका रमेश विष्टले अध्यक्षमा उम्मेदवारी दिएका छन् । विष्टलाई माओवादी केन्द्र, माधव नेपाल नेतृत्वको नेकपा एकीकृत समाजवादीले सहयोग गर्ने गरी चुनावी गठबन्धन बनेको हो ।

प्रेस सेन्टरबाट अध्यक्षमा कमल गिरीले उम्मेदवारी दिएका थिए । गिरीको उम्मेदवारी फिर्ता गर्न लगाएर माओवादी सहितका विपक्षी दलहरूले कांग्रेसको बिद्रोहीसँग चुनावी गठबन्धन गरेको हो ।

यो गठबन्धनले पत्रकार सम्मेलन गरेर आफूहरूको प्रतिवद्धता समेत सार्वजनिक गरेको छ । जसमा नेपाली पत्रकारितालाई स्वच्छ, मर्यादित र उत्तरदायी बनाउनका लागि महासंघभित्र र पत्रकारिता क्षेत्रमै शुद्धीकरण गर्ने उल्लेख छ ।

'नेपाल पत्रकार महासंघलाई क्रियाशील पत्रकारहरूको मात्रै साझा संगठन बनाई आम श्रमजीवी पत्रकारको साझा नेतृत्वदायी पेशागत संगठनका रुपमा अघि बढाउने छौं' प्रतिबद्धतापत्रमा उल्लेख छ । यो गठबन्धनबाट अध्यक्षमा रमेश विष्ट, वरिष्ठ उपाध्यक्षमा रोशन पुरी, उपाध्यक्ष महिलामा गंगा पौडेल (बराल), समावेशी उपाध्यक्षमा सुभाष प्रसाद साह र महासचिवमा लेखनाथ न्यौपाने रहेका छन् ।

खुला सचिवमा उत्तरसिंह विष्ट, मधेसी सचिवमा श्रीजन झा, महिला सचिवमा सरिता बराइली, दलित सचिवमा वसन्त विक, आदिवासी जनजाती सचिवमा भिषण राई, एशोसियट सचिवमा विकास कार्की, कोषाध्यक्षमा रामकृष्ण अधिकारी रहेका छन् ।

खुला केन्द्रीय सदस्यमा केशव बहादुर भुल, दामोदर खनाल, लेखनाथ खतिवडा, बुद्द लोप्चन र रामकुमार श्रेष्ठ उम्मेदवार छन् । महिला सदस्यमा आदीवासी, जनजातीतर्फ सरु राना, मधेसीतर्फ मिनाकुमारी यादव, खस आर्यतर्फ दिया चन्द रहेका छन् ।

दलित केन्द्रीय सदस्यतर्फ लक्ष्मण दर्नाल उम्मेदवार छन् । आदीवासी जनजातीतर्फ अर्जुन बहादुर तामाङ उम्मेदवार छन् ।

मधेसीतर्फबाट चन्द्रदेव कामती, महिलातर्फ ललिताकुमारी साह, अपांगतातर्फ केन्द्रीय सदस्यमा अर्जुन काफ्ले, अल्पसंख्यकतर्फ केन्द्रीय सदस्यमा बख्तियार अलि रहेका छन् ।

लेखा समिति संयोजकमा ध्रुव रावल र लेखा समिति सदस्यमा गणेश प्रसाद बन्जाडे र लक्ष्मी चौधरी उम्मेदवार छन् । प्रतिष्ठान प्रदेशबाट केन्द्रीय सदस्यमा वीरेन्द्र ओली र साहस भट्ट उम्मेदवार छन् ।

यसअघि महासंघका अध्यक्ष विपुल पोखेलले सदस्यता विवादका कारण राजीनामा दिएका थिए। विवाद समाधान भएपछि महाधिवेशन गर्न लागिएको हो।

महाधिवेशनका नतिजाले महासंघको आगामी नेतृत्वको दिशा निर्धारण गर्नेछ। यसपटकको निर्वाचन कांग्रेस र एमालेनिकट संस्थाहरूबीचको सहकार्य र वामपन्थी समूहहरूको संयुक्त मोर्चाबीच रोचक प्रतिस्पर्धा हुने देखिन्छ।

पत्रकारहरू स्वतन्त्र हुनुपर्ने सामान्य मान्यता रहे पनि दलनिकट भएका कारण पत्रकारिताको निष्पक्षतामा प्रश्न उठ्दै आएको छ। दलको भ्रातृ संगठनकै हैसियतमा पत्रकारहरूले संस्था बनाएका छन्। यसरी निर्वाचित हुने दलनिकटका व्यक्तिले पत्रकारिता क्षेत्रको व्यावसायिक हितमा कम, दलीय आज्ञा बढी मान्ने गरेका छन्।

यसपालि निष्कृय पत्रकार हरूलाई हटाउनुपर्ने 'शुद्धीकरण' अभियान चलाइएको थियो। तर, यिनै दलनिकट संगठनहरूले यसमा लामो किचलो गरे। जेठमै हुनुपर्ने निर्वाचन सर्दै-सर्दै मंसिरमा पुगेको हो।

## ऋण .

कारोबार गर्ने संस्थाहरूमा बढी भएको पाइन्छ ।

सहकारी क्षेत्र सुधारको विषयमा सरकारले सरकार तथा संघीय मन्त्रालयको पहलमा अहिलेसम्म झण्डै आधा दर्जनपटक विभिन्न आयोग तथा समिति बनेर प्रतिवेदन तयार भएको छ । जसमध्ये पछिल्लोपटक डा. जयकान्त राउत नेतृत्वमा बनेको सहकारी क्षेत्र सुधार सुझाव कार्यदलले बचत तथा ऋण सहकारी क्षेत्रमा देखिएका समस्या र तीनको समाधानको विषयमा सरकारलाई प्रतिवेदनमार्फत सुझाव दिएको छ।

सो प्रतिवेदनले गैरसदस्यबाट ठूलो मात्रामा रकम जम्मा गर्ने, जगेडा कोषमा रकम कायम नगर्ने, एकभन्दा बढी सहकारीको शेयर सदस्य बनेर ऋण अपचलन गर्ने लगायतका दर्जनौं कारणले गर्दा सहकारी क्षेत्रमा समस्या आएको औंल्याएको छ ।

त्यस्तै, सांसद सूर्य थापा नेतृत्वको पछिल्लो छानबिन समितिले पनि बचत सङ्कलन गर्ने र ऋण प्रदान गर्ने प्रयोजनको लागि मात्रै बचत तथा ऋण सहकारीमा सदस्य बनाउने गरिएको, कार्यक्षेत्र विस्तार हुनु, उत्पादन र बजार प्रवर्द्धन कार्यमा कमी हुनु र नियमन अभाव लगायत कारणले समस्या देखिएको प्रतिवेदनमा उल्लेख गरेको छ ।

सहकारी क्षेत्रमा भएको ठूलो मात्राको वित्तीय र मौद्रिक कारोबार समग्र वित्तीय अनुशासनको पक्षमा नभएको छानबिन समितिको प्रतिवेदनले औंल्याएको छ ।

अघिल्लो वर्षको कार्यदलले औंल्याएका सुझाव र थापा नेतृत्वको समितिले औंल्याएका समस्यामा समानता देखिन्छ ।

कसरी जोगाउने ऋण तथा बचत सहकारी ?

कुल सहकारीमध्ये १३ हजारभन्दा बढी संख्याका सहकारीले ऋण तथा बचत कारोबार गर्छन् । जसमा केही सयदेखि हजारौं शेयर सदस्य जोडिएका छन् ।

नेपाल सरकारका पूर्व सचिव एवम् पूर्व सहकारी रजिष्ट्रार केदार न्यौपाने सहकारी भनेको स्वःनियम र सहकार्यमा आधारित भएको संस्था हुनुपर्ने बताउँछन् । तर, विशेषगरी शहरी क्षेत्र वा शहरोन्मुख क्षेत्रमा सञ्चालनमा आएका बचत तथा ऋण सहकारीहरूमा आबद्ध अधिकांश सदस्यले भने एकले अर्को सदस्यलाई चिन्दैनन् । सदस्यहरूले आफ्नो बचत र ऋणको विषयमा मात्रै सरोकार राख्छन् ।

सांसद् सूर्य थापा नेतृत्वको छानबिन समितिले समस्याग्रस्त सूचीकृत गरेका ४० सहकारी सहकार्यमा आधारित भन्दा पनि केही निश्चित व्यक्तिको तजबिजमा चलिरहेको थियो । यही मनोमानी रहेका कारण पछिल्लो समय शहरी क्षेत्रका बचत तथा ऋण सहकारीहरूको व्यवसाय प्रभावित छ ।

पोखरा महानगरपालिका सहकारी विभाग प्रमुख अनिल कार्कीका अनुसार महानगरमा सहकारीको बचत फिर्ता समस्या दिनहुँ कयौं बचतकर्ता गुनासो लिएर आउने गरेका छन् । पछिल्लो समयमा महानगरभित्र सञ्चालनमा रहेका धेरै सहकारीमा समस्या देखिएको उनले जानकारी दिए ।

देशका सातै प्रदेशका रजिष्ट्रार कार्यालयहरूले दिएको जानकारीअनुसार कोशी, मधेश, बागमती, गण्डकी र लुम्बिनी प्रदेशका दर्जनौं सहकारी समस्याग्रस्त अवस्थामा पुगेका छन् । तीमध्ये केही सहकारीका सञ्चालक सहकारी नै बन्द गरेर सम्पर्कविहीन छन् ।

हाल समस्याग्रस्त देखिएका संस्थाहरूले सहकारीको बोर्ड झुन्ड्याए पनि ती संस्था सहकारी नभएको सहकारी अभियन्ता तथा राष्ट्रिय सहकारी महासंघका पूर्वअध्यक्ष केशव बडाल बताउँछन् ।

'रवि/जीबी लगायत अहिले चर्चामा आएका जे-जति मानिसहरूको सवाल छ, ती संस्थाले सहकारीको बोर्ड त झुन्ड्याएका छन्, तर ती सहकारी होइनन्', बडाल भन्छन्, 'सहकारी हुनलाई सहकारीको नियमअनुसार चल्नुपर्छ ।' पूर्वसचिव केदार न्यौपानेले पनि ऋण तथा बचत सहकारीतर्फ इङ्गित गर्दै ती संस्थाहरू सहकारीभन्दा साहुकारी भएको बताए । ऋण तथा बचत सहकारीहरू अहिलेकै अवस्थामा चलिरहन नसक्ने उनले दाबी गरे ।

'मलाई लाग्छ ( बचत तथा ऋणको कारोबार गर्ने सहकारी संस्थाहरूलाई यही हिसाबले अगाडि बढ्न दिनुहुँदैन, जुन सहकारी संस्थाहरू समुदायमा आधारित छन् ( सबै एकाआपसमा परिचित छन्, सबैको पेशा व्यवसाय एकै किसिमको छ भने अलग हिसाबले लिन सकिन्छ', सचिव न्यौपानेले खबरहबसँग कुरा गर्दै भने, 'खासगरी सहरी क्षेत्रमा स्थापना भएर बचत तथा ऋणको कारोबार गरेका सहकारी संस्थाहरूलाई हामीले पुनरावलोकन गर्नुपर्छ जस्तो लाग्छ ।'

ऋण तथा बचत सहकारीहरूमा क्याप लगाउँदा र सुरक्षण व्यवस्था गर्दा पनि अहिले देखिएको समस्या न्यूनीकरण गर्न सकिने न्यौपाने बताउँछन् ।

अहिले संघीय, प्रदेश र स्थानीय तहमा सहकारी ऐन बनेका छन् । ती सहकारी ऐनमा सहकारीको सदस्य बन्नेदेखि त्यसको कार्यक्षेत्रसम्म स्पष्ट गरिएको छ । जस्तै - सहकारी ऐन, २०७४ को दफा २३ मा 'कुनै व्यक्ति एक स्थानीय तहको एकै प्रकृतिका एकभन्दा बढी संस्थाको सदस्य हुन पाउनेछैन' भन्ने व्यवस्था छ । तर, शहरी क्षेत्रका अधिकांश ऋण तथा बचत सहकारीले यो विषय पालना गरेको देखिँदैन । त्यस्तै, सोही ऐनको दफा ५० मा विषयगत वा बहुउद्देश्यीय सहकारीले बचत तथा ऋणको कारोबार गर्नेदेखि लगानीको विषयमा स्पष्ट व्यवस्था छ । तर, शहरी क्षेत्रका अधिकांश एउटै व्यक्ति धेरै सहकारीको सदस्य बन्नेदेखि ऐनले तोकेको विपरित लगानी गर्ने अभ्यास भएको स्पष्ट देख्न सकिन्छ ।

पूर्वमन्त्रीसमेत रहेका सहकारी अभियन्ता बडाल कर्जा सुरक्षण कोष, कर्जा सुरक्षण न्यायाधीकरण र प्रभावकारी अनुगमन व्यवस्था भए सहकारी क्षेत्रमा देखिएका समस्या समाधान गर्न सकिने बताउँछन् ।

समस्या देखिएका सहकारीहरूले सहकारी ऐन र सहकारीको अनुशासन पालना नगर्दा अहिलेको समस्या आएको, तर सहकारीको विकल्प बैंकिङ क्षेत्र हुन नसक्ने बडालको भनाइ छ ।

'कर्जा सुरक्षण कोष, कर्जा सुरक्षण न्यायाधीकरण र प्रभावकारी अनुगमनमा अभियान र सरकार सँगसँगै हुनुपर्छ भनी पहिल्यैदेखि भन्दै आयौं, तर त्यसको कार्यान्वयन हुन सकेन', बडाल भन्छन्, 'ऋण तथा बचत सहकारी भएकै कारण ती संस्थामा समस्या आएको होइन ।' बडालले भएको ऐन लागु गर्दा अहिले देखिएका धेरै समस्या समाधान हुने तर्क पनि गरे ।

नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लिमिटेड (नेफस्कून) का अध्यक्ष चन्द्र ढकाल ऋण तथा बचत सहकारीलाई बैंकिङ क्षेत्रमा रूपान्तरण गर्ने भन्दा पनि सहकारीकै रूपमा राखेर राम्रो बनाउन सकिने बताउँछन् । अहिले केही सहकारीमा देखिएका समस्यालाई लिएर सबै सहकारीमाथि समान धारणा बनाउन नहुने उनको भनाइ छ ।

अध्यक्ष ढकालले समुदायमा आधारित नभएका बचत तथा ऋण सहकारीहरूमा अधिक समस्या देखिएको बताए । सहकारी ऐनमा बचत तथा ऋण सहकारीसम्बन्धी विशेष व्यवस्था, कर्जा सुरक्षण कोष कार्यान्वयन र व्यवस्थित नियमन भए समस्या हल हुने ढकालको भनाइ छ ।

'सहकारी नियमावलीमा ०७५ सालदेखि नै कर्जा सुरक्षण कोषको व्यवस्था थियो, तर, समस्या नदेखिने बेलासम्म राज्यले हाम्रो मागलाई सम्बोधन गरेन, बल्ल कर्जा सुरक्षण कोषको लागि बजेट विनियोजन गरेको छ, अब संस्था कहिले बन्छ ?', उनी भन्छन्, 'सहकारी क्षेत्रमा समस्या आउनुमा धेरै पक्षको कमजोरी छ, सहकारी ऐनमा बचत तथा ऋण सहकारीको लागि विशेष व्यवस्था र नियमन गरेर जाने हो भने सहकारीलाई बैंकिङ क्षेत्रको रूपमा रूपान्तरण गर्नुपर्ने अवस्था आउँदैन ।'

समिति र कार्यदलका सुझाव पनि सुरक्षणसहितको बचत

सहकारीको समस्या र समाधानको विषयमा अध्ययन तथा छानबिन गरेका समिति तथा कार्यदलले पनि सुरक्षण र नियमन सहितको बचत तथा ऋण सहकारी हुनुपर्ने सुझाव दिएका छन् ।

डा. जयकान्त राउत नेतृत्वको सहकारी क्षेत्र सुधार सुझाव कार्यदलले सहकारीमा बचतकर्ता सदस्यको बचत सुरक्षणको प्रत्याभूति गर्न तत्काल कर्जा सुरक्षण कोष स्थापना गर्नुपर्ने सुझाव दिएको छ । सो कार्यदलले कोषको प्रारम्भिक संरचनाको विषयमा पनि प्रतिवेदनमार्फत् सरकारलाई स्पष्ट सुझाव दिएको छ ।

'सहकारीमा बचतकर्ता सदस्यको बचत सुरक्षणको प्रत्याभूति गर्न सहकारी ऐन, २०७४ को दफा १०१ बमोजिम सहकारी बचत तथा कर्जा सुरक्षण कोष तत्काल स्थापना गरी बचतकर्ताको बचत सुरक्षण गर्ने', प्रतिवेदनमा उल्लेख छ ।

साथै, सोही समितिले 'सहकारीसम्बन्धी प्रचलित नीतिगत मापदण्डबमोजिम एकजना सदस्यले कतिसम्म बचत गर्न पाउने, एकजना शेयर सदस्यले कतिसम्म कर्जा लिन पाउने भन्ने सीमाको प्रभावकारिता जरूरी' भएको औंल्याएको छ । साथै सो समितिले सहकारी नियमनको स्पष्ट व्यवस्था नहुञ्जेल सेवाकेन्द्र विस्तारमा पनि रोक लगाउनुपर्ने औंल्याएको छ ।

सरकारले चालु आर्थिक वर्षमा सहकारी बचत सुरक्षण कोष स्थापनाको लागि केही बजेट पनि विनियोजन गरेको छ । तर, अहिलेसम्म कोषको संस्थागत संरचना बनाउने विषयमा भने कुनै सुरसार देखिँदैन ।

त्यस्तै, पछिल्लोपटक सांसद सूर्य थापाको नेतृत्वमा बनेको छानबिन समितिले पनि सहकारी क्षेत्रको लागि बचत तथा कर्जा सुरक्षण कोष अपरिहार्य भएको प्रतिवेदनमा उल्लेख गरेको छ । सरकारले विभिन्न समयमा सहकारी क्षेत्रको सुधारको लागि गठन भएका समिति, कार्यदल र आयोगले दिएका सुझावलाई कार्यान्वयन गर्नुपर्नेमा थापा नेतृत्वको समितिले फेरि सरकारलाई सुझाव दिएको छ ।

०८० र ८१ को प्रतिवेदन कार्यान्वयन आवश्यक : मैनाली

पूर्वसचिव गोपीनाथ मैनालीले सरकारले छानबिन समिति र सुझाव कार्यदलले दिएका सुझावलाई कार्यान्वयन गरेमा बचत तथा ऋण सहकारी क्षेत्रका धेरै समस्या समाधान हुने बताए ।

उनका अनुसार सहकारी क्षेत्रको सुधारका लागि अहिलेसम्म गठन भएका ११ वटा कार्यदल, आयोग र समितिमध्ये सातवटा ऋण बचत सहकारीकेन्द्रित थिए ।

'सबैभन्दा राम्रो भनेको गौरीबहादुर कार्कीको प्रतिवेदन हो, त्यो न्यायिक छानबिनबाट कार्यान्वयन गर्ने भन्ने छ, जयकान्त र अहिले सूर्य थापाले दिएको प्रतिवेदन अलि दीर्घकालीन प्रकृतिको छ', मैनालीले भने, 'एउटै प्रतिवेदन कार्यान्वयन गरे पनि सहकारी क्षेत्रलाई राम्रो बनाउन सकिन्छ ।'








इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com




# निर्देशक पवन जोशीको १४२औं म्यूजिक भिडियो सार्वजनिक




निरन्तर गीत रचना र म्यूजिक भिडियो निर्देशन गर्दै आएका वरिष्ठ निर्देशक जोशीको निर्देशनमा नेपालभाषाको गीत 'नुगः चफुनां' को म्युजिक भिडियो सार्वजनिक भएको हो ।

शनिवार ललितपुरमा आयोजित एक कार्यक्रमका बीच संसार संगीतालयकी संरक्षक साथै समाजसेवी, गायिका सरीता महर्जनले उक्त म्यूजिक भिडियो सार्वजनिक गरिन् ।

कार्यक्रममा बोल्दै वरिष्ठ निर्देशक जोशीले म्यूजिक भिडियोमा सामाजिक घटनाक्रमलाई चित्रण गर्न खोजेको र सामाजिक सन्देश दिने खोजेको बताए ।

त्यसैगरी संसार संगीतालयकी संरक्षक महर्जन, वरिष्ठ सिने पत्रकार विजयरत्न तुलाधर, संसार क्रिएसन्सका क्रिएटिभ डाइरेक्टर स्वतन्त्र महर्जनले पछिल्लो समय नेपालभाषाको म्यूजिक भिडियो क्षेत्रले व्यापकता पाउँदै गएको भन्दै खुसी व्यक्त गरे । सार्वजनिक गरिएको गीतमा स्वर र रचना नव गायिका नानीशोभा महर्जनको रहेको छ भने संगीत राजेन्द्र शाक्यले दिएका छन् ।

म्यूजिक भिडियोमा गायिका महर्जनको साथमा राजेश महर्जन, जयलक्ष्मी सिद्धी बज्राचार्य, मीरा डंगोल, प्रेम कार्कीको साथै संगीत गुरु रत्न वेहोसी बज्राचार्य लगायत दर्जनौ कलाकारहरुको अभिनय रहेको छ ।

राजेश शाक्यले छायांकन र दृश्य सम्पादन गरेका छन् । म्यूजिक भिडियो संसार्स अनलाइन टिभी युट्युव च्यानलमार्फत सार्वजनिक भइसकेको छ ।

# नेटफ्लिक्स सिरिज "स्क्विड गेम" सिजन २ को प्रिमियर




काठमाडौं । नेटफ्लिक्सको बहुप्रतीक्षित र लोकप्रिय शो 'स्क्विड गेम'लाई सोमबार दक्षिण कोरियाली राजधानी सियोलमा भव्य प्रिमियर गरिएको छ । राष्ट्रपति युन सुक येओलले सैनिक शासन लागू गर्न गरेको असफल प्रयासको घटनालगत्तै यो प्रतीक्षित शोलाई प्रिमियर गरिएको थियो ।

'स्क्विड गेम' दोस्रो सिजनको कथा पनि डिस्टोपियन कथामा आधारित छ जसले विभाजित समाजप्रति दक्षिण कोरियाली दृष्टिकोणलाई प्रस्तुत गर्छ । यो शो विभाजित र असमानताको कथा दर्शाउने हिंसक कथावस्तुमा आधारित छ । 'प्यारासाइट' र 'के-पप'पछि 'स्क्विड गेम'लाई दक्षिण कोरियाको सांस्कृतिक पावर फैलाउने एक माध्यमको रुपमा लिइन्छ ।

शोका दुवै सिजनका लेखक र निर्देशक ह्वाङ डोङ-ह्युकले प्रिमियर समारोहमा बोल्दै मुलुकमा भएको घटनाले आफू स्तब्ध भएको बताए । 'मेरो देशमा जे भयो त्यसले मेरो हृदय भारी बनाएको छ', उनले भने, 'यो अत्यन्तै दुर्भाग्यपूर्ण र डरलाग्दो छ । यस्तो बेतुकको परिस्थितिले सिंगो राष्ट्र सुत्न सक्दैन ।'

राजनीतिक अराजकताका कारण दक्षिण कोरियालीले सडकमा उत्रिनु परेको बताए । 'कोरियालीले चिन्ता, डर र उदासीनताले भरिएको वर्षको अन्त्य बिताउनुपरेको छ' उनले भने, 'मैले समेत सैनिक शासन लागू गर्न भएका प्रयासको समाचार रातभर टिभी अघि बसेर हेरिरहें ।'

'स्क्विड गेम'को सिजन २ मा प्रशस्तै नयाँ कलाकार हेर्न पाइनेछ । एक 'क्रिप्टो विशेषज्ञ' जो ऋणको भारले थिचिएको छ र एक ट्रान्सजेन्डर पात्र जोसँग शल्यक्रियाका लागि खर्च जुटाउने क्षमता छैन । अभिनेता लि-जङ जेले शोका मुख्य पात्र सियोङ-गी हुन पात्रको भूमिका निर्वाह गरेका छन् र उनी खेलमा फर्किएका छन् ।

गी-हुनले खेल जितेको तीन वर्षपछि पुनः खेलमा फर्किएको कथाबाट दोस्रो सिजन सुरु हुन्छ । जीवन र मृत्युको खेल आयोजना गर्ने संस्थालाई उत्तरदायी बनाउन उनले गर्ने संघर्ष यसको कथावस्तु हुन्छ । सन् २०२१ मा रिलिज भएको पहिलो भाग दक्षिण कोरियाली लहर भनिने 'हाल्यू'को लागि एक महत्वपूर्ण पक्ष थियो ।

स्क्विड गेमको दोस्रो सिजन २६ डिसेम्बरबाट नेटफ्लिक्समा स्ट्रिमिङ हुनेछ ।

# अन्तर्राष्ट्रिय फिल्म फेस्टिभलहरुमा अवार्ड जितेका फिल्महरु काठमाडौंमा




काठमाडौं । नेपाल मानवअधिकार अन्तर्राष्ट्रिय चलचित्र महोत्सव२०२४ को चलचित्र प्रदर्शन तालिका सार्वजनिक भएको छ । महोत्सवले डकुमेन्ट्री, सर्ट, एनिमेसन, फिक्सन विधाका फिल्मको सूची सार्वजनिक गरेको हो ।

नेपालसहित २३ देशका ४७ फिल्म छनोटमा भएको आयोजकले जनाएको छ । महोत्सवमा विश्वप्रतिष्ठित कान्स फिल्म फेस्टिभलमा ग्राण्ड जुरी प्रिक्स अवार्ड जितेको भारतकी पायल कपडियाको 'अल वी इमाजिन एज लाईट' पनि देखाइने भएको छ । सर्ट सेक्सनमा अर्वाड प्राप्त 'द म्यान हु कुडनट रिमेन्न साईलेन्स', ७४ औं बर्लिन अन्तर्राष्ट्रिय चलचित्र महोत्सवमा सर्ट सेक्सनमा अवार्ड प्राप्त 'एन आउटरन', ७४ औं बर्लिन अन्तर्राष्ट्रिय चलचित्र महोत्सवमा जेनेरेशन के प्लसमा अवार्ड प्राप्त ' अनार दाना', बर्लिनमै छनोट भएको 'ओटिट' लगायत चलचित्र पनि प्रतिस्पर्धाका लागि छनोट भएका छन् । अन्तर्राष्ट्रिय सर्ट वृत्तचित्र प्रतिस्पर्धामा 'हाऊ टु प्लिज'सहित ९ वटा वृत्तचित्र छनोट भएको महोत्सव आयोजकले बताएको छ ।

सन् २००९ मा स्थापना भएको मानवअधिकार चलचित्र केन्द्रले मानवअधिकारसँग सम्बन्धित चलचित्रको प्रवर्द्धन र प्रदर्शन लागि नियमित रुपमा महोत्सव गर्दै आएको छ । केन्द्रले मानवअधिकारको पैरवीका लागि विभिन्न अन्तक्रिया तथा गोष्ठी पनि आयोजना गर्दै आइरहेको छ ।

# 'कार्साङ' शेर्पा समुदायको आाखीझ्याल

काठमाडौं । चलचित्र ' कार्साङ'को टिजरले उत्साहजनक प्रतिक्रिया पाइरहेको निर्माणपक्षले जनाएको छ । चलचित्रको विषय, संकृतिको उठान र जिटरमा देखिएको सम्बन्ध र आम समुदायमा हुने व्यवाहारलाई दर्शकले मन पराइरहेको निर्देशक यश शेर्पाले बताएका छन् ।

"विशेषगरी हामीले जुन समुदायको संस्कृति देखाएका छौं । त्यसलाई दर्शकले मन पराइहरनु भएको छ । कमै मात्रै चलचित्रमा देखिएको शेर्पा समुदायको कथा हेर्न पाइने भयो भन्ने उत्सुकता देखिएको छ," निर्देशक शेर्पाले भने, "आम नेपाली गाउँले जीवनको कथा र परिवेश हेर्न पाइने भयो भन्ने उत्सुकता व्यक्तिगत रुपमा र सामाजिक सञ्जालमार्फत पनि आइरहेको छ ।" सामाजिक सञ्जाल र सुवेच्छुकहरूबाट आएको प्रतिक्रियाले पोष्टप्रोडक्सनमा रहेको चलचित्रमा मेहनत गर्ने हौसला मिलेको उनले बताए । कलाकारको क्यारेक्टर लुक्स र अभिनयको पनि तारिफ गरेको शेर्पाले बताए ।

केही दिनअघि सार्वजनिक टिजरमा ग्रामीण परिवेश र शेर्पा समुदायको कल्चर देख्न सकिन्छ । जसमा धामी बस्ने दयाहाङ राई र उनको गरिबीदेखि जितु नेपालका श्रीमान् श्रीमतीको सन्तान नहुँदाको तनावसम्म समेटिएको छ ।

साथै, ऋण, सरसापटले काम चलाउने ग्रामीण परिपाटी, एकजोर नयाँ लुगाका लागि सन्तानले गरेको अपेक्षा पूरा गर्न नसक्ने अभिभावकको चरम गरिबी टिजरमा समावेश छ ।

यम शेर्पाको डेव्यु निर्देशन रहेको 'कार्साङ'मा कथा पनि निर्देशक स्वयंले लेखेका छन् ।

अभिनेता दयाहाङ राई, डेब्यु अभिनेत्री सिर्जना निङलेखु, जितु नेपाल, दीया मास्के, बुद्धि तामाङको मुख्य भूमिका रहेको चलचित्रमा सृष्टि गौतम, डोमा ह्योल्मो, प्रेम लोप्चन, सुरवीर पण्डित, कविता आले, कर्मा शेर्पा, छोकी शेर्पा, सभ्य दीप गौतम, बिमल पुरी, दिलीप पन्त, छिरिङ शेर्पा, पवन कुमार गोले, अमृत शेर्पालगायत कलाकारको अभिनय रहेको छ । सिनेमाको बाल कलाकारमा राशी लिम्बु, सोहन थापा रहेका छन् ।

यार्सा फिल्म्स र पुरुषोत्तम प्रधान फिल्मसको प्रस्तुतिमा निर्माण भएको चलचित्रमा पुरुषोत्तम प्रधान छायांकार हुन् । उनी निर्माता पनि हुन् । चलचित्रको सह-निर्माता गोविन्द बोहरा, कार्यकारी निर्माता आङछिरिङ शेर्पा हुन् । लाइन प्रोड्युसरमा वीरेन्द्र शाही छन् । ' कार्साङ'को अन्तर्राष्ट्रिय वितरक अधिकार हुल्या इभेन्टस सुमन पराजुली र सोमलाल थोकर लिएको छन् । नेपालमा आरआर फिल्मसले वितरण गर्नेछ ।














प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ अङ्क २० | ने.सं. ११४५ थिंलागा तृतीया | पुस ०३ गते बुधबार, २०८१ | 18 Dec. 2024 Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## सरकारको गोप्य कुण्डली र अहिलेसम्म नमिलेका भविष्यवाणी



काठमाडौं । देशमा अहिले नेपाली कांग्रेस र नेकपा एमालेको गठवन्धनको सरकार रहेको छ। यी दुई शक्ति वास्तवमा एकअर्काका विपरित नीति, कार्यक्रम, सोच र सिद्धान्तबाट परिचालित राजनीतिक शक्ति हुन । अर्थात् यीनको राजनीतक सिद्धान्त र राज्य सञ्चालनको मोडालिटीसमेत भिन्न छ। अर्को शब्दमा भन्नु पर्दा यी दुई विपरित ध्रुवका राजनीतिक पार्टी हुन । जसको निर्वाचनको समयमा समेत तालमेल हुने गरिएको छैन । तर नेपालको राजनीतिमा अहिले राज्यसत्ताको कुर्सीमा बस्न राजनीतिक बिचारधारा नै मिल्नु पर्छ भन्ने छैन, जसको जोसँग पनि तालमेल हुन सक्छ ।

यो देशको लागि राजनीतिक पार्टीहरु राजनीतिक बेइमानी हो। यहाँ राजनीतिक दलको ध्येय नै सत्ताको कुर्सीमा पुग्ने देश र जनता अनि राज्यको विषयमा कुनै सरोकार नराख्ने र जे आउँछ बाँदेर खाने प्रवृति हावी हुँदै गइरहेको छ , यो नै देशको अस्थिर राजनीतिको उपज पनि हो ।

यसैको कारण पनि देशमा सरकार फेरबदलको बहस पटक-पटक दोहोरिने गरेको छ। सत्तासाझेदार कांग्रेस-एमालेका शीर्ष नेताविरुद्ध भदौ १० गते काठमाडौंमा गौरा पर्व समारोहमा नाराबाजी भएपछि एकपटक सरकार ढालिने चर्चा भयो । दशैंको समयमा फेरि त्यस्तै भयो। अहिले पनि सरकार परिवर्तनको बहस राजनीतिक वृत्तमा चलिरहेको नै छ।

सरकार परिवर्तन हुँदैछ भनेर अफवाह फैलिनुमा युट्युब र फेसबुकका विश्लेषकहरु हावी देखिएका छन्। सरकार परिवर्तन, सहकारी ठगी, डोनाल्ड ट्रम्पको जीत, सन्दीप लामिछानेदेखि शिखर धवन र आशिका तामाङदेखि तोसिमा कार्कीसम्मको बारेमा एकै विद्वानले युट्युबमा धारावाहिक दिन्छन् ।

चिया पसलमा पनि यस्तै गफ हुने गरेको छ । तर आक्कलझुक्कल पुग्दा त्यस्ता ठाउँमा पनि त्यही गफ गरेको सुनिन्छ- 'सरकार कहिले ढल्छ ?' मानिसलाई अरू कुराको जवाफ चाहिएको छैन, केवल एउटै प्रश्नको जवाफ चाहिएको छ- 'सरकार कहिले ढल्छ ?' मानौं, नेपालमा सरकार गठन/विघटनको राजनीतिक सिरिज चलिरहेको छ। यो हुनुको कारण पनि सायद नेपालमा राजनीतिक दलहरु सिद्धान्त र नीतिमा नचलेकोले हुन सक्दछ।

सरकार बनेको भर्खर ६ महिना पूरा भएको छ । तर, गठन भएको दिनदेखि नै मानिसहरूले सोधिरहेका छन्, 'सरकार कहिले ढल्छ ?' यस अघि बनेको नेपाली कांग्रेस र नेकपा माओवादी केन्द्रसहितको रास्वपा, समाजबादी र केही मधेशवादी दलहरु मिलेर बनेको सरकार पनि पुरा वर्ष दिन बित्न नपाउँदै ढलेको थियो । अहिले काममा व्यस्त हुनेलाई भन्दा चियापसलमा फाल्तु कुरा गरेर बस्ने बेरोजगारलाई धेरै चासो हुन्छ, सरकारको भविष्यबारे । मानौं कि, चलिरहेको सरकार ढलेर नयाँ बनेपछि देशका यावत समस्या समाधान हुनेछन्।

'सरकार कहिले ढल्छ ?' भन्ने नेपाली समाजमा महारोग बनेको छ । के वास्तवमा फेरि सत्ता समीकरण फेरबदलको गृहकार्य चलिरहेको हो ? शेरबहादुर देउवाको नेतृत्वमा सरकार गठन भएको सय दिन नपुग्दै तत्कालीन विपक्षी दलका नेता केपी शर्मा ओलीले आवश्यक ठाने एक हप्तामै सरकार ढाल्ने चेतावनी दिएका थिए- कात्तिक ३, २०७८ सालमा ।

'अहिले पनि यो सरकार ढाल्दिऊँ भन्ने हो भने एक हप्तामा ढल्छ। यस्तै साँठगाँठ र गठबन्धन गर्ने हो भने त हामी सात दिनभित्र ढालिदिन्छौं । लोभीपापीहरू छन्, दिए भइगो नि, ढलिहाल्छ नि ! दिए सिध्दिने कुरा छ त्यहाँ,' पार्टीको बागमती प्रदेश अधिवेशनलाई सम्बोधन गर्ने क्रममा ओलीले भनेका थिए । सरकार ढल्ने विश्लेषण गरेकाहरू र ढल्छ भनेर प्रतीक्षा गरेकाहरूलाई खासै शुभ संकेत छैन । धेरैको आशंका थियो- 'ओलीले चीनमा बीआरआई ऋण सम्झौता गर्छन् र त्यसको असरले सरकार ढल्छ।' ओलीको चीन भ्रमणका बेला बीआरआई फ्रेमवर्क सम्झौतामा हस्ताक्षर भयो, तर ऋण लिने सम्झौता नभई कांग्रेसले तयार गरेको ड्राफ्टमा । तर नेपालमा यही

बाँकी पेज ७ मा

## २१औं ज्यापु दिवस हर्षोल्लासपूर्वक मनाइयो



काठमाडौं । २१ औं राष्ट्रिय ज्यापु दिवस देशभरका ज्यापू समुदायले आज हर्षोल्लासका साथ मनाएका छन् ।

यःमरी पुन्हिका दिनमा मनाइँदै आइरहेको ज्यापू दिवस नाथेश्वर छुट गुथि वटुटोलको संयोजकत्वमा वटुटोलबाट र्‍याली तथा परम्परागत झाँकीका साथ सुरु भएको थियो । "पुर्खाको सम्झना, हाम्रो संस्कृति, हाम्रै परम्परा" यो वर्षको नारा रहेको छ ।

काठमाडौं महानगरपालिकाका उपप्रमुख सुनिता डङ्गोल र्‍यालीको समुद्घाटन गर्नुभएको थियो ।

बाँकी पेज ७ मा

## एक दशकमा १० हजार बढीको मृत्यु



काठमाडौं । रोजगारको सिलसिलामा विदेशमा श्रमिकको रुपमा विदेश जाने नेपालीहरुको मृत्यु हुने संख्या डरलाग्दो देखिएको छ । पछिल्लो एक दशकको तथ्यांक हेर्दा १० हजारभन्दा बढी नेपालीले विदेशमा ज्यान गुमाएका पाइएको छन् । अन्तर्राष्ट्रिय प्रवास श्रमिक दिवसमा जिफन्टले निकालेको तथ्यांक अनुसार आर्थिक वर्ष २०७१/७२ देखि २०८०/८१ सम्म अर्थात् १० वर्ष अवधिमा वैदेशिक रोजगारी क्रममा १० हजार २ सय ७४ नेपालीले ज्यान गुमाएका छन् ।

गत आवमा मात्र १ हजार ४ सय ९२ नेपाली श्रमिकले ज्यान गुमाएको र ५ सय ७८ जना अंगभंग भई स्वदेश फर्किएको वैदेशिक रोजगार बोर्डको तथ्यांकले देखाएको छ । ०७१/७२ मा ६ महिला र १ हजार पुरुषको प्रवासमा ज्यान गएको थियो । २०७२/७३

बाँकी पेज २ मा

## भक्तपुर महोत्सवको समापनसँगै मध्यपुर महोत्सव हुने



भक्तपुर । ५ दिने भक्तपुर महोत्सव गत २८ मङ्सिरबाट शुरु महोत्सवले भक्तपुर नगर बेहुली झैँ आकर्षक र जीवित संग्राहलयको रुपमा सजिएको भक्तपुर नगरपालिकाले २५ वर्षपछि आयोजना गरेको महोत्सव हेर्न दैनिक १ लाख बढी पर्यटक भक्तपुर भित्रिएका नगरपालिकाको भनाइ छ । आन्तरिक पर्यटक तान्ने मुख्य उदेश्य रहेको नगर प्रमुख सुनिल प्रजापतिले बताएका छन् । एक पटक भक्तपुर आउने पर्यटक पटक पटक आउने गरी पर्यटकीय क्षेत्रलाई व्यवस्थित बनाइएको उनले बताएका छन् ।

महोत्सवमा बाँसुरी बाजा प्रतियोगिता, भजन , नौबाजा, नगरा बादनलगायत परम्परागत र आधुनिक सास्कृतिक नाचले पर्यटक तानिएका छन् । परम्परागत बाद्यवादन, खेलकुद, साहित्यिक एवं सास्कृतिक कार्यक्रमहरुले महोत्सवलाई मनोरन्जनपूर्ण बनाएको पर्यटकहरू बताउँछन् । महोत्सवमा चोकै पिच्छे फरक अनुभुती गर्न पाइने महोत्सवमा स-पारिबार आएका आगन्तुकहरुको भनाई छ ।




भेषभुषा र जात्रापर्वको जिवन्त प्रस्तुतीले महोत्सव भक्तपुर चिन्ने-चिनाउने अवसर बनेको छ । पुस्तक प्रदर्शनी, परम्परागत पेशा र शीपको प्रदर्शनी घरेलु उत्पादनको प्रदर्शनीले भक्तपुरको ज्ञान र शीप उजागर गर्ने प्रयत्न गरिएको देखिन्छ ।

खाना महोत्सव, दही महोत्सव, दिपावली त्यसका अलावा पानीमा चल्ने साइकल, डुंगा र बालमैत्री खेलहरु र भक्तपुर नगरमा ३२ क्षेत्रमा फरक फरक विषयको प्रस्तुती रहेको छ । कला र संस्कृतीको अत्यन्तै धनी भक्तपुर नगर विश्व सम्पदा सूचीमा सुचिकृत रहेको प्राचिन शहर हो । भक्तपुर भ्रमण नगरेकाहरुका लागि भक्तपुर महोत्सव एक अवसरको रुपमा रहेको छ । सानो नगर भएपनि एउटा भ्रमणले पूरै भक्तपुर हेर्न

बाँकी पेज ७ मा

## कहिले बन्छ "जनताको सरकार, नेपाल सरकार" ?

अश्विन दानी

केही दिनअघि भारतीय प्रधानमन्त्रीका एकजना पूर्व निजी सुरक्षा अधिकारी लक्की बिष्टले नेपाल सरकार एक महिनाभित्रै ढल्ने दाबी गरे ।

पूर्व 'रअ एजेन्ट' बिष्टले नवभारत टाइम्ससँगको अन्तर्वार्तामा आफुसँग नेपालको सरकार ढल्ने सूचना रहेको दाबी गर्दै भनेका छन्, 'केही दिनपछि एउटा अर्को समाचार सुन्नुहुनेछ, नेपाल सरकार ढल्नेवाला छ । १० दिन १५ दिन भित्र खबर आउनेवाला छ कि फेरि सरकार ढल्दैछ । जुन दुई महिनाअघि बनेको थियो ।'

त्यसो त नेपाल सरकारका वर्तमान नेतृत्व अर्थात् प्रधानमन्त्री केपी शर्मा ओली केही हप्ताअघि चीन भ्रमणमा गएर फर्किए लगत्तै सरकार ढल्छ भनेर निकै चर्चा हुन्थ्यो । ओली नेतृत्वको टोली चीन पुगे, फर्किए । फर्किएको पनि हप्तादिन बढि भइसक्यो। उनी चीन जाने तयारी गर्दागर्दै र नफर्किएसम्म ओली आउने वित्तिकै सरकार ढल्छ भनेर दाबी गर्नेहरु केही दिन यता चुपचाप थिए ।

तर, फेरि बिष्टको अन्तरवार्ता सार्वजनिक भएसँगै पुनः सरकार ढल्दैछ भन्दै सामाजिक संजाल भर होहल्ला मच्चाई रहेका छन् । त्यो होहल्ला मच्चाउने को हुन ? राजनीतिक दलका नेता कार्यकर्ता ? नेताका आडमा सरकारलाई 'मौरिको चाका' जसरी निचोरेर स्वार्थसिद्धि गर्न पल्किएकाहरु ? सत्ताधारी विचौलीया ?

अन्यथा, देशमा आफ्नो भविष्य सुनिश्चित नदेखेर बिदेश पलायन हुनकै लागि पासपोर्ट बोकेर दलाललाई पैसा बुझाउन दौडिरहेका नेपालीलाई सरकार ढल्दा के चिन्ता ? संघर्षले थाकेर सडकका पेटिमा भोकभोकै दौडधुप गरिरहेका नेपालीलाई सरकार ढल्दा के को दुख ? गरिबीकै कारण उपचार नपाएर मृत्युको पर्खाईमा बसेका नेपालीलाई सरकार ढल्दा के को पिडा ? अन्यायमा परेर न्याय माग्न जाँदा सत्ताको बतासबाट थप पिडित बनेपछि आँसु बगाउँदै हिँडेका नेपालीलाई सरकार ढल्दा के को ढाढस ? गरिब, असहाय, निमुखा अनि चाकडी गर्न नजान्ने नेपालीलाई सरकार ढल्दा अनि फेरिँदा के को खुसी ?

चर्को राजनीतिक अस्थिरता र उथलपुथलबाट पिल्सिएर सरकार प्रति अपनत्व भाव गुमाएका नेपालीलाई लागि सक्यो, 'जुन जोगी आए पनि कानै चिरेको ।'

खैर, आफुलाई पुर्व 'रअ एजेन्ट' बताउने बिष्टले २ महिना अघि बनेको नेपाल सरकार फेरि ढल्दैछ भनेका थिए । बिष्टकै कुरालाई लिएर सामाजिक संजालमा होहल्ला मच्चाउने उनीहरु यस्ता छन्, कसैले 'कागले कान लग्यो'

बाँकी पेज ७ मा

# उद्योग तथा वाणिज्य विवाद समाधान सम्बन्धी अन्तर्राष्ट्रिय सम्मेलन सम्पन्न

काठमाडौं । ललितपुरको गोदावरीमा जारी 'नेपाल वैकल्पिक विवाद समाधान सप्ताह २०२४' समापन भएको छ । सम्मेलनले १३ बुँदे घोषणापत्रसमेत जारी गरेको छ । नेपाल अन्तर र्राष्ट्रिय एडीआर केन्द्रको आयोजनामा विहीबारदेखि सुरु भएको सम्मेलन आइतबार समापन भएको हो । घोषणापत्रमा सिंगापुर कन्वेन्सनमा हस्ताक्षर र अनुमोदन गर्न, हिमाल संरक्षण र हरित मध्यस्थता प्रवर्द्धन गर्न सहयोग गर्न, न्यायमा पहुँच सुधार गर्न अनलाइन विवाद समाधान प्रणाली र प्रविधिको विकास गर्न, पर्वतीय क्षेत्रहरूको संरक्षणका लागि पहाडी राष्ट्रहरूको समूह गठन गर्न विशेष रुपमा आव्हान गरिएको छ ।

सप्ताहमा विवाद समाधानमा संलग्न विभिन्न देशका संस्था, विषय विज्ञ तथा व्यवसायीहरूको सहभागितामा मध्यस्थता र मेलमिलापका माध्यमबाट विवाद समाधानलाई प्रोत्साहन गर्ने उद्देश्यले विभिन्न कार्यपत्रहरु प्रस्तुत गरिएको थियो ।

विवाद समाधानको आधुनिकीकरण: न्यायमा पहुँच अभिवृद्धिका लागि एडिआरको भूमिका' भन्ने नाराका साथ सुरु भएको सम्मेलनमा १७ देशका प्रतिनिध सहभागी थिए । सम्मेलनको अन्तिम दिन जलवायू परिवर्तनको अवसरबारे विशेष सेसन चलेको थियो ।

सम्मेलनमा नेपालसहित जापान, स्विजरल्याण्ड, अष्ट्रेलिया, हङकङ, मलेसिया, इन्डोनेसिया, सिंगापुर, भारत, पाकिस्तान, बंगलादेश, भुटान, श्रीलंका, यूके, न्यूजिल्याण्ड, चीन र यूएसए गरी विश्वका १७ देशका प्रतिनिधिहरुको सहभागिता रहेको एडिआरका महासचिव वरिष्ठ अधिवक्ता मातृकाप्रसाद निरौलाले बताए ।

निरौलाका अनुसार कार्यक्रम अवधिभर करार सम्बन्धी विवाद, विकास निर्माण सम्बन्धी, लगानी सम्बन्धी विवाद, संयुक्त राष्ट्र संघका मोडल कानुन सम्बन्धी व्यवस्था र मध्यस्थता एवम् मेलमिलाप सम्बन्धमा न्यायपालिकाको भूमिका लगायतका विषयमा छलफल भएका छन् ।

सम्मेलनमा प्रधानमन्त्री केपी शर्मा ओली, एनआईएसीका अध्यक्ष डा.मुक्तिराम रिजाल, अध्यक्ष, नेपाल चेम्बर अफ कमर्सका दीपक श्रेष्ठ उपाध्यक्ष, उद्योग वाणिज्य संघका अध्यक्ष चन्द्रप्रसाद ढकाल, सर्वोच्च अदालत बार एशोसिएशन नेपालका अध्यक्ष हरिशंकर निरौला, भारतको सर्वोच्च अदालतका पूर्व न्यायाधीश रविन्द्र भट्ट, सर्वोच्च अदालतका न्यायाधीश कुमार रेग्मी लगायतको उपस्थिति थियो ।

समापन समारोहमा संचालन भएको जलवायू परिवर्तनको असरबार विशेष सेसनमा डा.सापकोटाले जलवायु परिवर्तन र हरित मध्यस्थता अभियानको महत्वमाथि प्रस्तुति दिंदै असरबारे स्पष्ट पारेका थिए । नेपालमा जलवायु परिवर्तनका कारण सन् २०१९ सम्म वार्षिक २ हजार ७७८ मिलियनको आर्थिक क्षति भएको पनि उनले बताए । उनले हिमालयको पर्यावरणीय र भौगोलिक विशेषताहरूलाई जोड दिँदै यस क्षेत्रबाट उत्पन्न हुने गंगा, ब्रह्मपुत्रजस्ता प्रमुख नदीहरूको महत्त्वबारे चर्चा गरे ।

'हिमालय क्षेत्र जलवायु परिवर्तनको प्रत्यक्ष असरमा परेको छ। यसले केवल प्राकृतिक प्रणालीमा मात्र नभई लाखौं मानिसको जीवनशैलीमा पनि गहिरो प्रभाव पारेको छ', डा.सापकोटाले आफ्नो प्रस्तुतिमा भनेका छन् । समापन समारोहका क्रममा नेपालको सर्वोच्च अदालतका न्यायाधीश सपना प्रधान मल्लले प्रविधिले जीवनयापनमा परिवर्तन ल्याएको बताएकी छन् ।

उनले भनिन्, 'प्रविधिले जीवनयापनमा परिवर्तन ल्याएको छ । सबैंको हातमा मोबाइल फोन छ । मैले पहिलोपटक कम्प्यूटर १९९० मा ईटाली देखेकी थिए । अहिले इमेलको एक्सेस हाम्रो मोबाइलमा छ । अहिले प्रविधिले हामीलाई सकारात्मक कुराहरु दिएको छ। र हामीले यसबाट फाइदा पनि लिइरहेका छौं ।'

समारोहमा एनआईएसीका अध्यक्ष, डा.मुक्ति रिजाल, आरएमआईटी, भारत/अस्ट्रेलियाका प्राध्यापक डा.राजेश शर्मा, बीएडीआरसी, भूटानका प्रमुख प्रशासक, टेन्जिन लिवान, सिंगापुर इन्टरनेशनल आर्बिट्रेशन सेन्टरका स्निग्धा भट्ट, सर्वोच्च अदालत, नेपालका शाखा अधिकृत सिम्रन नापित लगायतले घोषणापत्र जारी गरेका हुन् ।

घोषणापत्रमा उल्लेख गरिएका मुख्य विषयहरु

१. नेपाल सरकारलाई सिंगापुर कन्वेन्सनमा हस्ताक्षर र अनुमोदन गर्न शीघ्रताका साथ कदम चाल्न आह्वान गर्दछौं ।

२. अन्य देशहरूलाई पनि सिंगापुर कन्वेन्सनलाई प्राथमिकताका साथ हस्ताक्षर र अनुमोदन गर्न आग्रह गर्दछौं ।

३. हिमालय क्षेत्रको महत्त्वलाई ध्यानमा राख्दै अन्तर्राष्ट्रिय समुदायलाई हिमालय संरक्षण र हरित मध्यस्थता प्रवर्द्धन गर्न सहयोग गर्न आह्वान गर्दछौं ।

४. हिमालय, भूटान, र अन्य पहाडी तथा भू-आबद्ध राष्ट्रका सरकार र एडीआर समुदायलाई अन्तर्राष्ट्रिय नियम निर्माण प्रक्रियामा संलग्न हुन प्रोत्साहन गर्दछौं ।

५. नेपाल सरकारलाई हिमालय र अन्य पर्वतीय क्षेत्रहरूको संरक्षणका लागि पहाडी राष्ट्रहरूको समूह गठन गर्न नेतृत्व लिन आग्रह गर्दछौं ।

६. न्यायमा पहुँच सुधार गर्न अनलाइन विवाद समाधान प्रणाली र प्रविधिको विकास गर्न सबै राष्ट्रलाई आह्वान गर्दछौं ।

७. अपाङ्गता र विविधता समावेशी एडीआर प्रणाली निर्माण गर्न आग्रह गर्दछौं ।

८. बैंकिङ, बीमा, ऋण पुनर्संरचना, र वित्तीय उपकरणसँग सम्बन्धित विवाद समाधानका लागि नमूना मध्यस्थता, आर्बिट्रेसन, र अन्य एडीआर प्रक्रियाहरूको सिफारिस गर्न आग्रह गर्दछौं ।

९. एडीआर सम्बन्धी ऐनहरूको अन्तर्राष्ट्रिय समन्वय गरी सीमापार विवाद समाधानलाई सहज बनाउन आग्रह गर्दछौं ।

१०. नेपाललाई क्षेत्रीय र अन्तर्राष्ट्रिय विवाद समाधानका लागि केन्द्रका रूपमा विकास गर्न रणनीतिक पहल गर्न प्रोत्साहन गर्दछौं ।

११. "सार्वजनिक नीति" को दायरालाई स्पष्ट पार्दै न्यायोचित र पूर्वानुमानयोग्य सीमापार विवाद समाधानलाई प्रवर्द्धन गर्न आग्रह गर्दछौं ।

१२. विदेशि आर्बिट्रेसन अवार्डहरूको मान्यता र कार्यान्वयनका लागि पारस्परिक सम्मान र आदानप्रदानको सिद्धान्तलाई सबै राष्ट्रले पालन गर्नुपर्छ ।

१३. एडीआर क्षमता विकास, ज्ञान आदानप्रदान, र उत्कृष्ट अभ्यासहरूको विकासमा सहयोग गर्न सबैलाई आह्वान गर्दछौं ।

# यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यकलाई उद्यमी बनाउने अभियान सुरु

काठमाडौं । यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायले राजनीतिक समावेशितासँगै आर्थिक सशक्तीकरणको अभियान सुरु गरेका छन् । मायाको पहिचान नेपाल र सफल पार्टनर्सको सहकार्यमा आइतबारदेखि समुदायका सदस्य व्यावसायिक ज्ञान लिने कार्यशालामा सहभागी भएका छन् ।

व्यवसायको आधारभूत ज्ञान र प्रस्तावित व्यवसाय/उद्यममा केन्द्रित कार्यशाला १० देखि १२ हप्तासम्म सञ्चालन हुनेछ । नयाँ व्यवसायका लागि अवसरको खोजी, बजारीकरण, बिक्री गर्ने कला, नगद प्रवाह व्यवस्थापन लगायतका विषयमा कार्यशाला केन्द्रित रहने मायाको पहिचान नेपालले जनाएको छ ।

समुदायका सदस्यका लागि सुरु भएको आर्थिक रूपमा सशक्तीकरणको अभियान सुनौलो अवसर भएको संविधान सभा सदस्य एवं मायाको पहिचान नेपालका कार्यकारी निर्देशक सुनिलबाबु पन्तले बताए । कार्यशाला आफूसँग भएका व्यावसायिक सीपहरू विकास गर्न र आफ्नो उद्यमलाई अर्को स्तरमा पुऱ्याउनका लागि राम्रो अवसर हुने पन्तले बताए । 'सफल पार्टनर्ससँग पहिलो साझेदारी हो,'पन्तले भने,'व्यवसाय गरिरहेका र सुरु गर्न लागेका समुदायका सदस्यहरूलाई यो कार्यशाला फलदायी हुने विश्वास छ ।'कार्यशालामा सहभागी समुदायका सदस्यहरूले चिया पसल, लञ्चबार, ठेला पसल, तन्दुरी, फार्म हाउस, होटेल, रेस्टुरेन्ट, होमस्टे, ग्रिन हाउस, हस्पिटालिटी, युनिसेक्स सैलुन, डकुमेन्ट्री निर्माण, अचार उद्योग, टेलरिङ, फेन्सी पसल सञ्चालन गर्ने चाहना व्यक्त गरे । समुदायका सदस्यको व्यावसायिक ज्ञान कम्प्युटर र एआईले विस्थापित गर्न नसक्ने रहेको व्यावसायिक विज्ञ आशुतोष तिवारीले बताए । यी सबै आइडिया कम्प्युटर र एआईले अवरोध नगर्ने खालका रहेको उनले बताए ।

# ग्वंग:को "मै एक मै अनेक" निबन्धसंग्रह विमोचन




भक्तपुर । संस्कृतिविद् एवम् साहित्यकार तेजेश्वरबाबु ग्वंग:को निबन्धसंग्रह 'मै एक मै अनेक' सोमवार विमोचन भएको छ । ग्वंग:को उक्त निबन्धसंग्रह नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें (रोहित)ले भक्तपुर महोत्सवको पुस्तक प्रदर्शनीस्थल लामगालमा विमोचन गर्नुभएको हो ।

सो अवसरमा अध्यक्ष बिजुक्छैँले व्यक्तिको अभिव्यक्ति फरक फरक शैलीमा प्रतिबिम्बित हुने बताउँदै साहित्यकारहरुले शब्द, बिम्ब र प्रतिकको रुपमा साहित्यहरु सिर्जना गर्नुपर्नेमा जोड दिनुभयो । प्रगतिशील साहित्यबाट देश र जनताको हित हुने दावी गर्दै उहाँले साहित्यलाई प्रचारको माध्यमको रुपमा लिनुपर्ने बताउनुभयो ।

उहाँले साहित्यकारहरु कहिल्यै पनि राजनीतिबाट अलग हुन नसक्ने चर्चा गर्दै साहित्यकारले प्रत्यक्ष देखेको र भोगेको स्पष्ट रुपमा कथा, कविता, नाटक आदि मार्फत कलम चलाउनुपर्ने धाराण राख्नुभयो ।

भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले भक्तपुरको कला र संस्कृति प्रचारप्रसारमा साहित्यकार तेजेश्वर ग्वंग:को उल्लेखनीय योगदान रहेको र ग्वंगद्वारा लिखित भक्तपुर सम्बन्धी लेख रचनाले भक्तपुरको जीवन्त चित्रण गरेको जानकारी गराउनुभयो ।

प्रमुख प्रजापतिले भक्तपुर कला र संस्कृतिको सहर भएकोले भक्तपुर महोत्सवमार्फत अध्ययन अनुसन्धानकर्ताहरुको लागि महोत्सव एउटा अवसरको रुपमा रहेको बताउँदै भक्तपुरमा रहेका मुर्त अमुर्त सम्पदा अन्तर्राष्ट्रिय जगतमा चिनाउन पनि महोत्सवले मद्दत पुर्याउने बताउनुभयो ।

साहित्यकार तेजेश्वरबाबु ग्वंग:ले विगतका आफ्ना साहित्य लेखनको अनुभव सुनाउँदै आफुले नेपाल भाषा, नेपाली भाषा र अंग्रेजी भाषामा सहित्य लेख्दै आएको समेत बताउनुभयो ।

वरिष्ठ निबन्धकार एवं पुस्तकका सम्पादक श्रीओम श्रेष्ठ 'रोदन'को सभापतित्वमा सम्पन्न भएको पुस्तक विमोचन कार्यक्रममा सुन्दर स्वदेश प्रकाशनका अध्यक्ष ऋषिराम पाण्डे र प्रदिप सापकोटाले पनि बोल्नुभएको थियो

## एक .

मा २४ महिला र ७ सय ८९ पुरुष गरी ८१३ को मृत्यु भएको देखिन्छ । २०७३/७४ मा १८ महिला र ७ सय ३७ पुरुष गरी प्रवासमा ७ सय ५५ जनाको ज्यान गएको थियो ।

यस्तै २०७४/७५ मा ८ सय पुरुष र २१ महिला कामदारको विदेशमा ज्यान गएको थियो । त्यसपछि २०७५/७६ मा ७ सय ९६, २०७६/७७ मा ६ सय ५६, २०७७/७८ मा १ हजार २ सय ४९, २०७८/७९ मा १ हजार ४ सय ७९, २०७९/८० मा १ हजार २ सय ८ र २०८०/८१ मा १ हजार ४ सय ९२ नेपाली श्रमिकले विदेशमा ज्यान गुमाएका छन् । यसरी वार्षिक १००० नेपाली श्रमिकले विदेशमा ज्यान गुमाउने गरिएको तथ्यांकले देखाउँछ ।

जिफन्टका अनुसार वैदेशिक रोजगार विभागले मृतक संख्या गन्ने र श्रमिककै पैसाले बनेको कल्याणकारी कोषबाट मृतकको परिवारलाई भुक्तानी दिनुबाहेक केही गरेको देखिँदैन । गन्तव्य मुलुकमा श्रमिकको मृत्यु रोक्न कार्यस्थल तथा आवासको अवस्था सुधारका लागि सरोकारवालासँग छलफल गर्ने योजना बनाउनेतर्फ कुनै वास्ता नगरिएको जिफन्टको भनाइ छ ।

वैदेशिक रोजगार बोर्डका अनुसार विदेशमा मृत्यु भएका अधिकांश व्यक्तिको मृत्युको कारण प्राकृतिक, हृदयाघात वा अचानक भएको मृत्यु लेखिएका कारण मृतक श्रमिकका परिवार गन्तव्य मुलुकबाट क्षतिपूर्ति लिनबाट पनि वञ्चित छन् ।

# शान्ति खल:को ४५ औं स्थापना दिवस सम्पन्न

भक्तपुर । मध्यपुर थिमिबाट उपत्यकाका विभिन्न स्थानमा स्थानान्तर भई गएका मध्यपुर थिमिवासीहरुको साझा संस्था शान्ति खल:को ४५ औं स्थापना दिवस थिमिको इण्द्रायणी मन्दिर परिसरमा सम्पन्न भएको छ ।

मध्यपुर थिमि नगरपालिकाका नगरप्रमुख सुरेन्द्र श्रेष्ठको प्रमुख आतिथ्यता र नगर उपप्रमुख विजयकृष्ण श्रेष्ठको बिशेष आतिथ्यतामा सम्पन्न भएको कार्यक्रमको सभापतित्व खल:का अध्यक्ष रत्नसुन्दर कायस्थले गरेको थियो ।

कार्यक्रममा खल:का जेष्ठ सदस्य, आजीवन सदस्य र २०८० को एसइइ परीक्षामा उतीर्ण सदस्यका छोराछोरीहरुलाई पनि खल:ले सम्मान गरेको थियो । त्यस्तै खल:लाई आजको दिनसम्म सहयोग गर्ने सदस्यहरुलाईसमेत सम्मान गरिएको उक्त कार्यक्रमको सहजीकरण संस्थाका सचीव मदन जोशीले गरेको थियो । कार्यक्रम पछि नेवारी परम्परा अनुसार लप्ते भ्वय्को पनि आयोजना गरिएको संस्थाका अध्यक्ष कायस्थले जानकारी दिए ।

# सुन्दर साकोसको सत्रौं वार्षिक साधारणसभा सम्पन्न

मध्यपुर थिमि । थिमिको शंखधरचोकमा कार्यालय स्थापना गरी सदस्यहरुबीच वितिय कारोवार गर्दै आएको सुन्दर बचत तथा ऋण सहकारी संस्था लि.को १७ औं साधारणसभा संस्थाका अध्यक्ष कविन्द्र श्रेष्ठको सभापतित्वमा थिमि बैंक्वेटमा गत शनिबार सम्पन्न भएको छ ।

कार्यक्रममा संस्थाको लेखा सुपरिवेक्षण समितिका संयोजक मोनिका श्रेष्ठले लेखा सुपरिवेक्षण प्रतिवेदन प्रस्तुत गरेको थियो । त्यस्तै संस्थाका अध्यक्ष श्रेष्ठले बार्षिक प्रतिवेदन प्रस्तुत गर्दै ३१५ जना सदस्यको ९६,२५,६०० शेयर पूँजी रहेको र संस्थाले आ.व.मा १ करोड ८५ लाख ९ हजार ७०७ लगानी गरी ८८ हजार ४२८ खुद बचत गर्न सफल भएको जानकारी दिए ।

कार्यक्रम मध्यपुर थिमि नगरपालिका नगरप्रमुख सुरेन्द्र श्रेष्ठको व्यस्तताको कारण उपस्थिति हुन नसकेकोले नगरपालिकाको सहकारी तथा रोजगार प्रवर्द्धन शाखाका प्रमुख अभयन्द्र रंजितको प्रमुख आतिथ्यतामा भएको कार्यक्रमको सहजीकरण संस्थाका सचीव शिव सुन्दर श्रेष्ठले गरेको थियो ।

# फरवार्ड माइक्रोफाइनान्सले बोनस शेयर दिने

सुनसरी । फरवार्ड माइक्रोफाइनान्स लघुवित्त वित्तीय संस्था लिमिटेडको बाह्रौं वार्षिक साधारण सभा सम्पन्न भएको छ । सुनसरीको दुहवीमा सम्पन्न १२ औं वार्षिक साधारण सभाको उद्घाटन गर्दै संघीय सांसद भगबती चौधरीले वर्तमान विश्व आर्थिक मन्दीको चपेटामा परेको बेलामा पनि नेपालका लघुवित्त संस्थाले ५९ लाख विपन्न सदस्यहरुलाई वित्तीय सेवा पुर्याइरहेकोमा प्रशंसा गर्नुभयो ।

ग्रामीण महिला उत्सुकता विकास मञ्चले २०५३ मा दुई रुपियाँ बचत गर्ने सदस्यहरूबाट बचत कार्यक्रम आरम्भ गरेको प्रसङ्ग स्मरण गर्दै पूर्वमन्त्रीसमेत रहेका चौधरीले गरिब तथा विपन्न समुदायको बचत तथा वाणिज्य बैंकबाट प्राप्त कर्जा परिचालन गरेर लघुवित्त संस्थाहरुले ऋण प्रवाह गरिरहेकाले कसैले चाहँदैमा ऋण मिनाहा हुन नसक्ने समेत जिकीर गरे । 'गाउँघरमा छरिएर रहेका गरिब विपन्न नागरिकको बचतलाई एकीकृत गर्दै वाणिज्य बैंकहरुबाट कर्जा लिएर लघुवित्त संस्थाहरुले कर्जा प्रवाह गरेका हुन्छन् । समुदायकै पुँजी भएकाले कसैले ऋण मिनाहा हुन्छ भन्दैमा ऋण मिनाहा हुँदैन ।' लघुवित्त वित्तीय संस्थाले मुलुकको आर्थिक र सामाजिक विकासमा महत्वपूर्ण योगदान पुर्याएको भन्दै आर्थिक सशक्तिकरणकी अभियान्ता समेत रहेका सांसद चौधरीले बताए ।

साधारण सभाका विशिष्ट अतिथि गढी गाउँपालिकाका अध्यक्ष तथा फरवार्ड माइक्रोफाइनान्स लघुवित्त वित्तीय संस्थाका पूर्व प्रमुख कार्यकारी अधिकृत आशनारायण चौधरीले लघुवित्त संस्थाले विपन्न ग्राहक सदस्यहरुको जीवनस्तर उकास्ने र युवाहरुलाई रोजगारी दिइरहेको बताउँदै वर्तमान समयमा नेपालकै लघुवित्त क्षेत्रमा देखिएका विषम अवस्थालाई चिर्न सबै पक्षले आ-आफ्नो क्षेत्रबाट काम गर्नुपर्ने बताए । लघुवित्त संस्थाले महिलालाई आर्थिक सशक्तिकरणमा जोडेको बताउँदै उनले लघुवित्त क्षेत्रका सवल पक्षहरुको चर्चा गरे ।

साधारण सभाले वित्तीय संस्थाका अध्यक्ष केशवराज पौडेलद्वारा सञ्चालक समितिको तर्फबाट प्रस्तुत गरिएको आर्थिक वर्ष २०८०/८१ को वार्षिक प्रतिवेदन पारित गरेको छ । साधारण सभाले शेयरधनीहरुलाई १३.३० प्रतिशत बोनस शेयर तथा कर समायोजन प्रयोजनका लागि ०.७० प्रतिशत लाभांश वितरण गर्ने सञ्चालक समितिको निर्णयलाई अनुमोदनसमेत गरेको छ । संस्थाको बोनस शेयर वितरण पछि वित्तीय संस्थाको चुक्ता पुँजी १ अर्ब १९ करोड ५९ लाख ५२ हजार ८७९ हुनेछ ।

सभामा वित्तीय संस्थाले २०८१ असार मसान्तसम्म ४० जिल्लाका ३८२ स्थानीय तह अन्तर्गत १५९ शाखा कार्यालय मार्फत २ लाख ८४ हजार ९६५ विपन्न परिवारका सदस्यहरूलाई वित्तीय सेवा प्रदान गरिरहेको जानकारी गराइएको थियो । साथै यस अवधिमा वित्तीय संस्थाले २० अर्ब ९० करोड ९२ लाख ५५ हजार कर्जा प्रवाह गरेको जानकारी गराइएको थियो । सभामा बोल्दै संस्थाका प्रमुख कार्यकारी अधिकृत रामदयाल राजवंशीले अहिले लघुवित्तको क्षेत्रमा देखिएको जटिल अवस्था विस्तारै सामान्यतर्फ उन्मुख रहेको बताए । वित्तीय संस्थाले शेयर सदस्यहरूलाई तुलनात्मक रूपमा सन्तोषजनक लाभांश वितरण गरेको बताउँदै उनले साधारण सभामा प्रस्तुत सुझावहरुलाई गम्भीरतापूर्वक कार्यान्वयन गर्ने प्रतिबद्धता व्यक्त गरे ।

# आदिवासी सवाललाई बौद्धिकीकरण हुन नसकेको – मन्त्री गुरुङ

काठमाडौं । सूचना तथा सञ्चार प्रविधि मन्त्री तथा सरकारका प्रवक्ता पृथ्वी सुव्बा गुरुङले नेपालको आदिवासी जनजातिका सवाललाई बौद्धिक जगतले नपत्याएको बताउनु भएको छ ।

'आदिवासी आन्दोलनमा बौद्धिकिकरण हुन सकेको छैन, यसै कारण आदिवासीको सवाललाई राजनीतिक क्षेत्र, कर्मचारीतन्त्रले नपत्याएको हो ।' आदिवासीको संवैधानिक निकाय आदिवासी जनजाति आयोगले शुक्रबार राजधानीमा आयोजना गरेको दुइ दिवशिय आदिवासी ज्ञान सम्मेलनको उद्घाटन गर्दै सरकारका प्रवक्ता गुरुङले भन्नु भयो 'आदिवासी आन्दोलन उपनिवेशीकरण विरुद्धको हो । अहिले उपनिवेशकारीहरुले उपनिवेश खडा गर्दैनन् । पुँजी र प्रविधि प्रयोग गरेर आर्थिक उपविश खडा गर्छन् । यस्ता विषयमा आदिवासी आन्दोलन मौन भएको पाएको छु ।'

आदिवासी जनजातिहरु जल, जंगल र जमिनका मालिक भएपनि यो अधिकार क्रमशः खोसिएको उहाँले टिप्पणी गर्नू भयो । 'खानी, खनिज तथा जलविद्युतले आदिवासीको भूमि र भूभाग खतम पारि सक्यो ।' उहाँले यसै प्रसंगमा थप्नु भयो -'अव २८ हजार मेघावाटको जलविद्युत उत्पादन हुँने योजना छ । यो सबै आदिवासीलाई प्रभाव पार्ने बिषय हो । यस सम्बन्धी आदिवासी आन्दोलनले बौद्धिक विमर्स गरेको पाएको छैन ।'

नेपालले आदिवासीको अधिकार सम्बन्धी विभिन्न अन्तराष्ट्रिय सन्धी र महासन्धीहरुमा हस्ताक्षर गरेको स्मरण गर्दै मन्त्री गुरुङले यसको कार्यन्वयनमा आदिवासीजन्य संघसंस्थाकै पहल आवश्यक पर्ने बताउनु भयो ।

यही प्रसंगमा उहाँले संयुक्त राष्ट्रसंघको विभिन्न संरचनामा आदिवासीको सहभागिता सम्बन्धी पनि प्रश्न गर्नु भयो । नेपालका आदिवासीहरुको समस्या अन्तराष्ट्रिय मञ्चमा पुग्न नसकेको उहाँको धारणा थियो । 'केही मानिसहरु संयुक्त राष्ट्रसंघको फोरममा जान्छन् । फोटो खिचेर फर्कन्छन् । आदिवासीको माँग र मुद्धालाई 'प्रोजेक्ट' मात्र बनाइएकोछ ।'

उहाँले आदिवासी आन्दोलनले अन्तराष्ट्रियकरण पनि हुन नसकेको र देश भित्र स्थानीयकरण पनि गर्न नसकिएको बताउनु भयो । 'गाउँमा आइएलओ महासन्धी नम्बर १६९ बारे थाहा नै छैन । युएनड्रिपको त कुरै नगरौ ।'

नेपालका राजनीतिक दललाई यी बिषयमा सहमत गराउने र उनीहरुलाई 'कन्भीन्स' गर्ने कुनै प्रयास नभएको उहाँको भनाइ थियो ।

अन्तराष्टिय कानुनले स्वतन्त्र, पूर्व जानकारी सहितको सहमति (एफपीक)को अधिकार आदिवासीलाई दिएको छ । तर यस सम्बन्धी कुनै छलफल भएको आफुले थाहा नपाएको पनि उहाँले बताउनु भयो । अहिले विभिन्न परियोजनाले समुदायको लागि सामाजिक उत्तरदायीको बजेट (सिएसआर) उपलव्ध गराउन थालेको छ । यो एफपीककै प्रावधान हो । तर यस सम्बन्धी पनि समुदायलाई जानकारी नभएको बताउनु भयो ।

यस अघि नेपाल आदिवासी जनजाति महासंघका अध्यष गेल्जे लामा शेर्पाले अन्तराष्टिय सन्धी महासन्धीको कार्यन्वयनको प्रसंग उठाउनु भएको थियो । अध्यष शेर्पाले संविधान संशोधन सम्बन्धी महासंघले बृहत परामर्स कार्यक्रम राख्न चाहेको बताउनु भएको थियो । संविधान संशोधनका विषयमा पनि मन्त्री गुरुङले आदिवासीको अधिकार कटौति गर्ने गरी संविधान संशोधन हुनै नसक्ने बताउनु भयो । 'संविधानको प्रस्तावनामा भएको धर्मनिरपेक्ष, संघीयता र समावेशीतालाई चलाउनै सकिदैन । संविधान संशोधनबाट आदिवासी जनजातिको अधिकार खोसिने हैन, थप्ने काम हुन सक्छ ।'

राष्टिय आदिवासी जनजाति उत्थान प्रतिष्ठानका उपाध्यक्ष रेशम गुरुङले आदिवासी जनजाति आयोग र प्रतिष्ठानको कार्यक्षेत्रबारे भ्रम रहेको हुँदा यसको निवारण गर्न आवश्यक रहेको बताउनु भयो ।

थारु आयोगका अध्यक्ष विष्णु चौधरी समेतले बोल्नु भएको उद्घाटन सत्रमा आयोगका अध्यष राम बहादुर थापा मगरले स्वागत मन्तव्य र प्रथाजनित संस्था सम्बन्धी डा. कुन्साङ योन्जनले कार्यपत्र प्रस्ततु गर्नु भएको थियो ।

प्रथाजनित संस्था सम्बन्धी दश कार्यपत्र

सम्मेलनमा विभिन्न अनुसन्धानकर्ताहरुले फरक फरक जातिका बारे अनुसन्धानात्मक कार्यपत्रहरु प्रस्तुत गर्नु भएको थियो । पहिलो सत्रमा आदिवासी ह्योल्मोको प्रथाजनित संस्था ह्युलठिमबारे कुमार यात्रु र टासी लामा ह्योल्मोको प्रस्तति थियो भने डा. सोम बहादुर धिमालले धिमाल जातिको परम्परागत संस्था माझी वाराङबोर आफनो प्रस्तुति राख्नु भएको थियो ।

यसै गरी नेवारहरुको गुठीबारे मल्ल के सुन्दर, याक्थुङ लिम्बुहरुको न्याय प्रणालीबारे डा. क्षितिज सुव्वा, र गुरुङहरुको प्रथाजनित संस्था नालसभा बारे खिम घलेले आफ्नो प्रस्तति राख्नु भएको थियो ।

शनिवार डा. कृष्णराज सर्वहारी, डा. पासाङ शेर्पा, अजितमान तामाङ, चन्द्रकुमार राई हतुवाली र डा. मीन श्रीको बिभिन्न प्रथाजनित संस्थाका बारे प्रस्तुति रहेको छ । इन्डिजियस

# गुठीको संरक्षण गर्न कानुन बनाउनुपर्छ भन्दा विरोध गरियो: प्रधानमन्त्री

काठमाडौं । प्रधानमन्त्री केपी शर्मा ओलीले राजनीतिक अस्थिरता अन्त्य गर्दै देशलाई विकृतिबाट सुकृतितर्फ लानका लागि वर्तमान संयुक्त सरकार बनेको स्पष्ट गर्नुभएको छ ।

ज्यापु संस्कृति विकास कोषद्वारा आज वसन्तपुरमा आयोजित २१औँ राष्ट्रिय ज्यापु दिवसमा समारोहलाई सम्बोधन गर्दै प्रधानमन्त्री ओलीले मुलुकमा भएको राजनीतिक परिवर्तनलाई धरापमा पार्ने र परिवर्तनमा योगदान गरेका दललाई अनावश्यक भ्रम फैलाएर बद्नाम गर्ने कोशिस भएकाले ठूलाठूला दलको सहकार्यमा सरकार बनेको बताउनुभयो । यो सरकार केबल सरकार बनाउनका लागि नभई मुलुकका समृद्धि र स्थिरताको यात्रालाई अगाडि बढाउन गठन भएको उहाँको भनाइ थियो ।

"गुठीको संरक्षण गर्न कानुन बनाउनुपर्छभन्दा मविरुद्ध भ्रम फैलाइएर विरोध गरियो । प्रहार गरियो । भ्रष्टाचारमा उजुरी परेका माथि २० औं वर्षसम्म होइन सकेसम्म छिटो र बढीमा पाँच वर्षभित्र छिनोफानो हुनुपर्छभन्दा भ्रष्टाचार गरेकालाई बचाउन खोज्यो भनेर गलत प्रचार गरियो । यस्ता हल्लाहरु नेपालमा भाँडभैलो मच्चाउने प्रयासका उपज हुन्", प्रधानमन्त्री ओलीले भन्नुभयो, "नेपाल भाँड्नका लागि र हाम्रो एकता भत्काउनका लागि कतिपयले हल्ला गर्ने गरेका छन् तर हामी साम्प्रदायिक विद्षका पछाडि होइन, सामाजिक सद्भावमार्फत राष्ट्रिय एकता ल्याउन चाहान्छौँ । यो जातलाई खेद, अर्को जातलाई खेद भन्दैनौँ । बैंकको ऋण नतिर भन्दैनौँ । नयाँ नेपाल निर्माणको महान अभियानमा हामी छौँ । नेपाललाई गरिबीबाट समृद्धि र सुखी बनाएरै छाड्नेछौँ ।"

प्रधानमन्त्री ओलीले अहिले आफूहरुले जे दुःख भोगेका छौँ त्यस्ता दुःखः हाम्रा छोरानातिहरुले दुःख भोग्नु नपरोस् भनेर सरकारले गम्भीरताका साथ काम गरिरहेको जनाउँदै सबै जाति, भाषी, आस्था र विश्वासका मानिस एकजुट भएर समाजलाई सभ्य र एकताबद्ध बनाउन आवश्यक रहेको बताउनुभयो । सामाजिक सञ्जालमा सुन्न र हेर्न नसकिने भाषा होइन, सभ्य र सुसंस्कृत हुँदै आत्मीयता र भ्रातृत्वका साथ नेपाल र नेपालीको एकता बचाउन पनि आग्रह गर्नुभयो ।

नेवारी संस्कृतिले विश्वमा पहिचान दिएको छ'

नेपालका सबै संस्कृतिभन्दा नेवारी संस्कृति इतिहास, निरन्तरता र मौलिक संस्कृति भएको संस्कृति भएको उल्लेख गर्दै उहाँले ज्यापु संस्कृतिलाई अगाडि बढाउन सफलता मिलोस् भनी कामना गर्नुभयो । राज्यकोषमा धेरै रकम नभए पनि ज्यापु दिवस मनाउन नेपाल सरकार, मन्त्रिपरिषद्बाट रु १० लाख सहयोगको निर्णय गरेको जानकारी दिँदै प्रधानमन्त्री ओलीले ज्यापु गुठीका लागि अक्षयकोषमा सक्दो रकमवृद्धि गर्ने विश्वास दिलाउनुभयो ।

उहाँले नेवारी संस्कृति र परम्पराले विश्वमा बेग्लै पहिचान दिएर राष्ट्रिय गौरव बढाउन योगदान दिएको बताउनुभयो । आफ्नो मर्यादित संस्कृति र परम्परालाई निरन्तरता दिएकामा धन्यवाद दिँदै धार्मिक र सांस्कृतिक सम्पदालाई प्रोत्साहन गर्न सरकार तत्पर रहेको बताउनुभयो ।

कार्यक्रममा प्रधानमन्त्री ओलीले विभिन्न पुरस्कार तथा सम्मान वितरणका साथै वार्षिक जात्रासम्बन्धी डिजिटल सामग्री र पुस्तक विमोचन गर्नुभयो ।

उपप्रधानमन्त्री एवं सहरी विकासमन्त्री प्रकाशमान सिंह, बागमती प्रदेशका संस्कृति, पर्यटन तथा सहकारीमन्त्री विमल ठकुरी, काठमाडौँ महानगरपालिकाका उपप्रमुख सुनिता डङ्गोललगायत उपस्थित हुनुहुन्थ्यो ।

प्रधानमन्त्री ओलीसमक्ष ज्यापु दिवसका लागि यही मङ्सिर १२ गते बालुवाटारमा ज्यापु संस्कृति विकास कोषका अध्यक्ष मङ्गलकृष्ण महर्जनसहित करिब सय जनाको समूहले नेवारी बाजागाजा प्रस्तुत गर्दै सगुन दिएर परम्परागत निमन्त्रणा (ग्वय् दाँ तयेगु ज्वाइवः) दिइएको थियो । रासस

# इतिहासविद् स्वर्गीय मञ्जुल याक्थुम्बा स्मृतिग्रन्थ

इतिहास तथा संस्कृतिविद् मञ्जुल याक्थुम्बा किरात जातिको एकता र आदिवासी पहिचानका निम्ति एक अथक योद्धा रहेको विज्ञले बताउनु भएको छ ।

किरात याक्थुङ चुम्लुङले प्रकाशन गरेको 'मञ्जुल याक्थुम्बाः प्रशासन-समाज-इतिहास' स्मृतिग्रन्थ विमोचन समारोहमा उहाँको योगदानको चर्चा गरिएको छ ।

नेपाल प्रज्ञा-प्रतिष्ठानका पूर्वकुलपति बैरागी काइँला, मञ्जुलकी धर्मपत्नी बिमला निङ्लेखु याक्थुम्बा, पूर्वमन्त्री तथा राजदूत दीपकुमार उपाध्याय, दुर्गामणि देवान, चुम्लुङका अध्यक्ष प्रेम यक्तेन र डा. कमल तिगेलाले मंसिर २९ गते शुक्रबार उक्त स्मृतिग्रन्थ सार्वजनिक गर्नुभएको हो ।

याक्थुम्बाको जन्म विक्रम संवत् १९९२ सालमा ललितपुरको तिखेदेवलमा भएको थियो । भने उहाँको निधन २०८० कार्तिक १२ गते भएको हो । उहाँको पूरा नाम मञ्जुलकुमार सिंह याक्थुम्बा भएपनि समाजमा मञ्जुल याक्थुम्बा नामले परिचित हुनुहन्थ्यो । राजनीतिशास्त्र र इतिहास विषयमा स्नातकोत्तर उहाँले ३८ वर्ष सरकारी सेवा गर्नुभएको थियो । २०४९ सालमा अवकासपछि लिम्बू जातिको सामाजिक संस्था किरात याक्थुङ चुम्लुङमा रहेर काम गर्नुभएको थियो । चुम्लुङको काठमाडौं उपत्यका तदर्थ समितिको अध्यक्ष हुँदै केन्द्रीय कार्यसमितिको उपाध्यक्ष र दुई कार्यकाल अध्यक्ष भएर समाजको नेतृत्व गर्नुभएको थियो । त्यसैगरी याक्थुम्बाको अध्यक्षतामा लिम्बू, राई, याक्खा, सुनुवार जातिलाई एकतावद्ध गरी किरात समन्वय समिति गठन गरी अस्तित्वमा रहेको छ ।

'मञ्जुल याक्थुम्बा एक कुशल प्रशासक हुनुहुन्थ्यो,' याक्थुम्बासँग सहकार्य गर्नुभएका किरात राई यायोक्खाका तत्कालीन महासचिव राजबहादुर राईले भन्नुभयो, 'उहाँको नेतृत्व क्षमताले गर्दा किरात जातीय एकतावद्ध भएर हुनसक्यौं । तत्कालीन पशुपति वनकालीमा किरातीको चिहान भत्काएप्रति सरकारले माफी माग्दै ३८ वटा चिहान पुनःनिर्माण गराउने काम भएको थियो ।' उभौली र उधौलीलाई किरात चाड घोषणा गराइएको थियो ।

इतिहास तथा संस्कृतिविद् याक्थुम्बाको 'मौलिक किरात धर्म संस्कार', 'किरात तीर्थस्थल सानोहात्तीवन', 'मुन्धुम र मिथकहरू' र 'को हुन् किरात र किरातलिम्बू ? के हो युमाधर्म ?' गरी चारवटा पुस्तककृति प्रकाशित छन् ।

बैरागी काइँला स्वर्गीय याक्थुम्बा एक हक्की, व्यवहारिक, इतिहास अध्ययनमा यकिन तथ्यप्रति दृढ विद्वानसमेत रहनु भएको बताउनु भयो । याक्थुम्बाको योगदानबारे पूर्वमन्त्री तथा राजदूत दीपकुमार उपाध्याय, ललितपुर महानगरपालिका प्रमुख चिरीबाबु महर्जन, चुम्लुङ अध्यक्ष यक्तेन, याक्थुम्बाका छोरा मुकहाङ याक्थुम्बालगायतले चर्चा गर्नुभएको थियो ।

# "नवीकरणीय ऊर्जा" तर्फ उन्मुख जापान



एजेन्सी - कोइला र ग्याँसमाथिको निर्भरता घटाउन जापानले सन् २०४० सम्ममा नवीकरणीय ऊर्जालाई आफ्नो ऊर्जाको शीर्ष स्रोत बनाउने योजना बनाएको छ ।

नयाँ योजनाअन्तर्गत सन् २०४० सम्ममा विद्युत् उत्पादनमा सौर्य र वायुजस्ता नवीकरणीय ऊर्जाको अंश ४० देखि ५० प्रतिशत पुग्ने अपेक्षा गरिएको हो ।

यो अघिल्लो वर्षको २३ प्रतिशत र सन् २०३० सम्ममा ३८ प्रतिशत कायम गर्ने लक्ष्यभन्दा बढी हो । प्राकृतिक श्रोत तथा ऊर्जा निकायले जारी गरेको योजनालाई सरकारी विज्ञहरूले समीक्षा गरी स्वीकृतिका लागि मन्त्रिपरिषदमा पेश गर्ने भएका छन् ।

जापानले ऊर्जा आपूर्ति र डेकार्बोनाइजेसन दुवै सुनिश्चित गर्न एउटै ऊर्जा स्रोतमा धेरै निर्भर हुनबाट बच्ने लक्ष्य राखेको मस्यौदामा भनिएको छ । यसले युक्रेन युद्धदेखि मध्यपूर्वको अशान्तिसम्मका ऊर्जा रेखाहरूलाई असर गर्ने भूराजनीतिक चिन्ताहरू पनि नवीकरणीय र आणविक ऊर्जामा परिवर्तन भएको बताएको छ ।

सन् २०२३ मा जापानको लगभग ७० प्रतिशत बिजुलीको आवश्यकता कोइला, ग्यास र तेल जलाउने बिजुली प्लान्टहरूले पूरा गरेको थियो । यो सङ्ख्या सन् २०४० सम्ममा ३० देखि ४० प्रतिशतमा झार्ने सरकारको चाहना छ । यसअघि घोषणा गरिएको सन् २०३० लक्ष्यमा हाइड्रोजन र अमोनिया समावेश गर्दा ४१ प्रतिशत वा ४२ प्रतिशत थियो ।

नयाँ योजनाहरूले सन् २०२३ मा ९८५ बिलियन किलोवाट घण्टा (केडब्लुएच) बाट सन् २०४० सम्म समग्र बिजुली उत्पादनमा १० देखि २० प्रतिशतले वृद्धि हुने प्रक्षेपण गरेको छ ।

# नर्वेजियन सागर मुनि बनाइदै सबैभन्दा लामो र गहिरो सुरुङ ।



एजेन्सी । नर्वेले सुरुङ भित्र संसारको सबैभन्दा लामो र गहिरो सुरुङ (रोगफास्ट टनेल नर्वे) निर्माण गरिरहेको छ । यसमा दैनिक ६ हजार सवारी साधन चल्न सक्नेछन् । यसको विशेषता थाहा पाएर तपाई पनि छक्क पर्नुहुनेछ ।

बिश्वमा यातायाललाई सहज बनाउन र व्यापार व्यवसाय र सुविधाका लागि लामो राजमार्ग निर्माण भइरहेका छन्, पहाडमा सुरुङ खन्ने काम भइरहेको छ । तर नर्वेले अचम्मको प्रयोग गरिरहेको छ । उनले समुद्रमा विश्वको सबैभन्दा लामो र गहिरो सुरुङ 'द रोगफास्ट' निर्माण गर्दैछ, जसमा १०० किलोमिटर प्रतिघण्टाको गतिमा कारहरू दौडन सक्नेछन् । यति मात्र होइन, दूरी पनि आधा हुनेछ र यात्रामा लाग्ने समय पनि निकै कम हुनेछ ।

यद्यपि जापान र चीन सुरुङका लागि प्रसिद्ध छन् । टोकियोको यामाते सुरुङ १८.२ किलोमिटरसम्म फैलिएको छ । तर मेट्रो रिपोर्टका अनुसार नर्वेले संसारकै सबैभन्दा लामो र गहिरो सुरुङ निर्माण गरेको छ । २४ दशमलव ५१ किलोमिटर लामो लार्डल र आयरल्याण्डको बीचमा यो सुरुङ निर्माण गरिएको हो । सुरुङ समुन्द्रमा १ हजार ३ सय फिटको गहिराइमा छ । यसको मतलब यो गहिराईमा कारहरू पानीमुनि दौडनेछन् । यो सुरुङले नर्वेको रोगल्याण्ड काउन्टीको रान्डबर्ग र बोकेन नगरपालिकालाई जोड्नेछ ।

यसको बिशेषता पनि जान्नुहोस्

हाल, रान्डबर्ग र बोकान बीचको यात्रा १५ घण्टा भन्दा बढी लाग्छ, तर विज्ञहरुका अनुसार सुरुङ निर्माण पछि यो दूरी १० घण्टा मात्र हुनेछ ।

यति मात्र होइन, जाडो, वर्षा वा हावाहुरी सबै मौसममा खुला रहनेछ । यसले हिमपातका कारण अहिलेसम्म यात्रा गर्न नसकेकालाई पनि सहज हुने छ ।

यो सुरुङको क्षमता यति छ कि यसबाट दैनिक ६ हजार सवार ीसाधन आवतजावत गर्न सक्नेछन् । यसलाई धेरै सहरसँग कनेक्टिभिटी दिइएको छ, जसका कारण ती सहरको दूरी पनि निकै कम हुनेछ ।

कति खर्च हुनेछ

टेलिग्राफको रिपोर्टका अनुसार यो सुरुङ बनाउन ४६ अर्ब डलरभन्दा बढी खर्च लाग्ने भएको छ । यो २०३३ मा तयार हुनेछ । अर्थात् निर्माण हुन अझै ९ वर्ष लाग्ने छ । सबैभन्दा महत्त्वपूर्ण कुरा यो पर्यटकहरूको लागि आकर्षणको केन्द्र हुनेछ । अहिलेसम्म धेरैजसो पर्यटक डुङ्गाबाट जाने गर्दथे तर अब यो सुरुङमार्गबाट जुनसुकै ठाउँमा जान पाउने भएका छन् ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### त्रिविमा पुनः दलगत भागबन्डा !

त्रिभुवन विश्वविद्यालय देशकै ठूलो र पुरानो भए पनि विश्वविद्यालय हो। तर यही त्रिविमा बेथितिहरु भइरहने समाचारहरु प्रकाशन भइरहन्छ । बिगतमा नेपालको शिक्षा क्षेत्रमा उच्च शिक्षा हासिल गर्ने एकमात्र बिश्वविद्यालयको रुपमा रहेको त्रिविमा अहिलेसम्म स्थिति बस्न सकेको छैन । विशेषगरी नेपालमा दलगत राजनीति शुरुभए यता पदाधिकारीको नियुक्तिमा भएको दलगत भागबन्डाले त्रिविको प्रकृति र प्रवृत्ति अप्राज्ञिक हुन पुगेको छ।

यसकै कारण पनि त्रिविको शैक्षिक क्षमतामा कमि आइरहेको र विद्यार्थीहरुको अभावमा त्रिविका कयौं कलेजहरु बन्द हुने अवस्थामासमेत पुगी सकेको छ । तर पनि दलका नेता तथा कार्यकर्ताहरुलाई देशकै सस्तो सुलभ र उच्च शिक्षा प्रदान गर्ने प्राज्ञिक निकायको हविगत प्रति कुनै चासो नरहेको देखिन्छ।

केही गत वर्ष एकाएक त्रिविमा उपकुलपतिलगायतका पदाधिकारी योग्यताका आधारमा नियुक्ति गरिने उद्धोष निकै चर्को स्वरमा गरिएको थियो। केही दशकसम्म दलगत भागबन्डामा पदाधिकारी नियुक्त गरिँदै आएको त्रिविमा योग्यताको आधार अपनाइने निर्णयले सुधारको आशा जगाएको थियो।

पछिल्ला नियुक्तिहरूमा त स्पष्ट देखिनेगरी दलगत भागबन्डाभएको छ। यद्यपि, योग्यताको आधारमा नियुक्ति गरिएको देखाउन छनोट समितिदेखिका प्रक्रियाहरू पनि अपनाइएको थियो। समितिहरूले सिफारिस गरेकै नामबाट नियुक्त गरिए पनि डिन र अन्य पदाधिकारीमा अन्ततः दलगत भागबन्डा भइछाड्यो।

पञ्चायत कालमा पनि त्रिविको पदाधिकारीहरूमा सत्ताका बफादारहरू नै नियुक्त हुन्थे । कतिपय उपकुलपतिहरू अञ्चलाधीश भएका थिए भने अञ्चलाधीश उपकुलपति पनि बनाइएका थिए। तै पनि बाँकी पदमा अहिलेजस्तो धेरै राजनीतिक हस्तक्षेप हुँदैन थियो । तर वर्तमान लोकतान्त्रिक व्यवस्थामा भने पूर्णतया राजनीतिक हस्तक्षेप हुने गरेको र दलीय भाडबण्डामा सरकारी स्वामित्वका निकायहरु चल्ने गरिएको देखिन्छ। जसको कारण आम जनमानसमा लोकतन्त्र प्रति नै वितृष्णा जागृत गराएको छ।

सत्तामा हुनेले 'लुटतन्त्र'को अभ्यास छाड्नु थिएन भने 'मेरिटोक्रेसी'को आवरण नदिएको भए हुन्थ्यो। त्यस्ता पदाधिकारीले गरेको कामको जसअपजसका लागि कम्तीमा सम्बन्धित दललाई जिम्मेवार ठान्न त पाइन्थ्यो । अहिले त दलगत स्वार्थ पूरा हुने तर दोष लिन नपर्ने काइते अभ्यास भयो।

त्रिविका पदाधिकारी नियुक्तिमा योग्यताको आधार अपनाइने घोषणाले प्राज्ञिक पदहरू दलगत भागबन्डा मुक्त हुने आशामा पछिल्लो नियुक्तिबाट तुसारो परेको छ। योग्यताको आधार (मेरिटोक्रेसी) अपनाइने अपेक्षा 'हात्ती आयो हात्ती आयो फुस्सा' हुनपुग्यो । यसका लागि अहिलेका कुलपतिलगायत सबै पदाधिकारी दोषी ठहरिनेछन्।

# नेपाली समाजको रणनीतिक संकट

● घनश्याम भुसाल

राज्य प्रशासन विस्तारमा खर्च बढ्दै गएको, जमीनको नापीका दौरानमा भएको भ्रष्टाचार र पहाडका स-सानो सङ्कलनबाट मध्यम वर्ग उदाएको, राजा स्वयंले शिक्षा, स्वास्थ्य लगायत गरिबीविरुद्ध समृद्धिको भोक जगाएको तर पूरा गर्न नसकेको, भूमिसुधारको असफलताले पुँजी निर्माणको सम्भाव्य अवसर गुमेको, त्यसले दलाल पुँजीवादलाई विकास गर्ने अवसर दिएको, अन्तरराष्ट्रिय कारणहरुले अनुदान बन्द भएको सार्वजनिक ऋण बढ्दै गएको, राजाले भारत र पश्चिमका चासोहरु पूरा नगरेको, त्यस परि स्थितिमा राजनीतिक पार्टीहरुका नाराले धेरैलाई आकर्षित गर्दै गएको । सङ्क्षेपमा, उत्पादनले थेग्न नसकेपछि उत्पन्न संकट थेग्न नसकेपछि पञ्चायत गयो र प्रजातन्त्र आयो । अर्थात्, दलाल पुँजीवादको नेताका रुपमा पञ्चायती व्यवस्थाले संकटहरुको समाधान गर्न सकेन।

नेपाली कांग्रेससँग उदारवादबाहेक अर्को बाटो थिएन । त्यसले पञ्चायतबाट हस्तान्तरित संकट समाधान गर्न सक्दैनथ्यो । एकातिर त्यो संकट र त्यसले बढाएका सामाजिक-आर्थिक मुद्दाहरु, अर्कोतर्फ संविधानले दिएका राजनीतिक अधिकारहरु, अर्थात् आधार र उपरिसंरचनाको त्यो अन्तरविरोध लामो समय सँगसँगै जानै सक्दैनथे । कांग्रेसको अर्थनीतिले राजस्व बढायो र केही सडक, स्कुल, अस्पताल, खानेपानी, पुल आदि बढायो । र, त्यसले नयाँ धनाढ्य वर्ग पनि जन्मायो । तर, कृषि र उद्योग कुनै ठोस परिवर्तन भएन।

यसैबीच, नेकपा एमालेका नीतिहरुले ग्रामीण पूर्वाधार र भत्ता आदिका खर्च बढाए। त्यसले पार्टीको लोकप्रियता त बढायो तर उत्पादनमा ठोस हस्तक्षेप गर्न सकेन।

प्रजातन्त्रले हैसियत सीमित गरिदिएको हुँदा राजाले शक्ति बढाउन चाहन्थे। नेपाली कांग्रेस र नेकपा एमाले सत्ताका लागि सङ्घर्षरत थिए । भारत आफ्नो हितको खोजीमा थियो । यस्तो अवस्थामा ती सबैको निशाना संसद बन्यो।

सांसद र संसद बदनाम हुँदै गएको अवस्थामा माओवादीले शुरुमा नेपाली कांग्रेस विरुद्ध, त्यसपछि एमाले विरुद्ध र अन्तिममा राजाका विरुद्ध जनयुद्ध गर्‍यो । पछि राजाले नेपाली कांग्रेस र नेकपा एमालेलाई माओवादीसँग एकै ठाउँमा उभ्याइदिए। र, राजतन्त्र गयो।

राजतन्त्रको अन्त्य नेपाली राजनीतिको असाधारण पानीढलो थियो। त्यसले नेपाली विशेषतामा जनवादी क्रान्ति सम्पन्न गरेको थियो । नेपाली कांग्रेसले त्यसलाई लोकतन्त्रको विस्तारका रुपमा बुझ्यो, उसका लागि त्यो स्वाभाविक थियो । तर, नेकपा एमाले र नेकपा माओवादीले त्यस परिघटनालाई ऐतिहासिक भौतिकवादको दृष्टिले हेर्न र बुझ्न सकेनन् । वस्तुतः त्यस असाधारण सन्धि-कालमा ती दुवै पार्टीहरु सैद्धान्तिक अन्योलमा फसे।

जनवादी क्रान्तिले सामन्तवादको संस्थागत वैधानिक अवशेषलाई उखेलेर समाजको पुँजीवादी रुपान्तरणलाई राजनीतिक तहमा पनि सम्पन्न गरेको थियो र नयाँ समाजवादी सामाजिक आर्थिक कार्यभारको द्वार खोलेको थियो। नेकपा माओवादीले त्यस ऐतिहासिक असाधारण घटनालाई जनयुद्धका कार्यनीतिक चलखेलको अवसरका रुपमा बुझ्यो। नेपाली कांग्रेस, एमालेलगायत बुर्जुवा पार्टीहरुलाई समेत राजतन्त्रका विरुद्ध प्रयोग गरेर राजतन्त्र उखेलियो र गणतन्त्र आयो । अब संसदवादी सबै बुर्जुवा पार्टीहरुलाई समेत किनारा लगाउँदै जनवादी क्रान्तिका लागि अघि बढ्नु पर्छ भनेर बुझ्यो।

उता, नेकपा एमालेले गणतन्त्रको स्थापनालाई जनताको बहुदलीय जनवादको उपलब्धिका रुपमा प्रचार गरेर गणतन्त्र नेकपा माओवादीको मात्रै होइन, आफ्नो पनि राजनीतिक उपलब्धि थियो भनेर स्थापित गर्न व्यस्त भयो । अर्थात् नेकपा एमालेले पनि यथास्थितिभन्दा पर देख्न सकेन। जनवादी क्रान्ति सम्पन्न भैसकेको नेपालमा जनताको बहुदलीय जनवादलाई नै सिद्धान्त र कार्यक्रमको रुपमा व्याख्या गर्‍यो । विशेष गरी नेकपा माओवादीको अन्योल कम्युनिष्ट आन्दोलनका लागि ठूलो क्षति सावित भयो।

नेकपा माओवादीले शान्ति प्रक्रियामा आउनासाथ 'हामीले नेकपा माओवादीको नेतृत्वमा जनवादी क्रान्ति सम्पन्न गर्‍यौं, समाजवादी क्रान्तिको ढोका खोल्यौं, अब दलाल पुँजीवादको ठाउँमा राष्ट्रिय पूँजीको विकास गर्दै समाजवादको आधार तयार गरौं' भन्ने नारा दिएर कृषि, उद्योग, शिक्षा, स्वास्थ्य, भ्रष्टाचार विरुद्ध सुशासनजस्ता क्षेत्रमा मुलुकले भोगिरहेका समस्याहरुको समाधान गर्ने कार्यक्रम दिएर अगाडि आएको भए नेपालको कम्युनिष्ट आन्दोलन नयाँ उचाइका साथ अगाडि बढ्थ्यो।

त्यसबेला नेकपा माओवादीसँग लडाकु शिविरमा रहेका करिब ३५ हजार र बाहिर रहेका समेत गर्दा करिब एक लाख पूर्णकालीन कार्यकर्ता र दुःख गर्न सक्ने समाजको तल्लो वर्गका लाखौं जनताको शक्ति थियो। सैद्धान्तिक दृष्टिहीनताका कारणले माओवादीले त्यो काम गर्न सकेन र विभाजनका अनेकानेक घटनामा फस्दै गयो।

नेकपा एमालेको नवौं महाधिवेशन समाजवादी कार्यदिशा निर्धारणका हिसाबले ऐतिहासिक उपलब्धि थियो । त्यसले आठौं महाधिवेशनका सैद्धान्तिक गल्तीहरु सच्याएको थियो । तर, मुख्य नेतृत्वमा महाधिवेशनको विचार र सिद्धान्तका विरुद्ध उभिएका कमरेड केपी ओलीलाई चुन्यो। हस्तान्तरण हुँदै आएको अर्थराजनीतिक संकटमा नेकपा एमालेको नेतृत्वले हस्तक्षेप गर्न नसक्ने कुरा त्यहीँबाटै शुरु भयो।

अन्योलग्रस्त राजनीतिमा भूकम्पले उत्पन्न गरेको राष्ट्रिय छटपटीले जे पनि गर्न सक्थ्यो, त्यसलाई राजनीतिक पार्टीहरुले बुद्धिमानीपूर्वक संविधान निर्माणतर्फ डोर्‍याए । भारतले लगाएको नाकाबन्दीले मुलुकमा देशभक्तिको भावनाले मुलुकलाई एक ठाउँमा बाँधी राख्यो।

०७४ को आमनिर्वाचनमा नेकपा एमाले र नेकपा माओवादी एकठाउँमा आउनु, संसदमा झण्डै दुई तिहाई सिट आउनु, पार्टी एकता हुनु र त्यस पार्टी समावादी कार्यदिशा समात्नुले कम्युनिष्ट आन्दोलनमा असाधारण सम्भावना अगाडि ल्याएका थिए । तर, कम्युनिस्ट आन्दोलनको भविष्यभन्दा ठूलो पार्टी बनाउने र सत्तामा राज गर्ने स्वार्थमा आधारित भएर गरिएको पार्टी एकत परिणाम दिएन । सरकार र पार्टीले दलाल पुँजीवादलाई नियन्त्रण र निरुत्साहित गर्दै राष्ट्रिय पूँजीको निर्माणलाई म ध्येय बनाएर अगाडि बढ्न सक्नु पर्थ्यो।

जुन कारणले पञ्चायत गयो, जुन कारणले राजतन्त्र गयो ती कारणहरु झन् विस्तार भएर आएका थिए। यता, पार्टी नेतृत्वमा गुटगत स्वार्थहरु टक्कराउँदै थिए। पार्टी अध्यक्ष तथा प्रधानमन्त्री (ओली) ले पार्टी र राजनीतिका संकटलाई पपुलिष्ट नाराहरुले ढाक्ने र मुलुकको ध्यान सस्तो प्रचारवाजीतिर लैजान थाले। संसदको विघटन र पार्टीको विभाजन भयो। केपी ओलीले संविधानमाथि नै पटक-पटक आक्रमण गरेपछि त्यसको प्रतिरोध आवश्यक हुन गयो।

संसदको पुनर्स्थापनाले मुलुकको तात्कालिक संवैधानिक संकट त समाधान गर्‍यो, तर अस्थिर राजनीतिले आर्थिक संकट बढाउने र फेरि आर्थिक संकटले राजनीतिक संकटलाई अझ बढाउने दुश्चक्र भने यथावत् नै रह्यो। ०७९ को निर्वाचनमा नेपाली कांग्रेस र नेकपा एमाले नै मुख्य पार्टीका रुपमा आएपछि यो संसदले मुलुकको समस्या समाधान गर्न सक्दैनथ्यो, बरु सत्ताको लुछाचुँडी बढाउँथ्यो । आज त्यही भैरहेको छ।

### तात्कालिक राजनीतिक अवस्था

संसदको विघटन र नेकपा विभाजन कम्युनिष्ट आन्दोलन र मुलुकको राजनीतिकै लागि धेरै व्यापक, गहिरो र दूरगामी दुस्प्रभाव पार्ने परिघटना हो।

हाम्रोजस्ता मुलुकहरुमा दलाल पुँजीवादले अर्थतन्त्र र राजनीतिलाई अपहरण गर्छ अनि राजनीति र अर्थतन्त्रलाई संकटमा पारिरहन्छ । साम्राज्यवादले ती संकटहरुलाई प्रयोग गरेर राजनीति र अर्थतन्त्रमा आफ्नो नियन्त्रण कायम गर्छ। राष्ट्रिय पूँजीको विकास नै त्यस्तो उपाय हो, जसले राजनीतिलाई राष्ट्रिय र स्वतन्त्र बनाउँछ।

राष्ट्रिय पुँजीको निर्माण कुनै न कुनै हिसाबले साम्राज्यवादसँग लडेर वा जोगिएर मात्रै हुन सक्छ। त्यसका लागि समाजवादी कार्यक्रम, दूरदर्शी तथा दृढ इच्छाशक्ति भएको राजनीतिक पार्टी र बलियो जनसमर्थन प्राथमिक शर्त हुन् । बलियो जनसमर्थन हुँदाहुँदै त्यसप्रति इमान्दार नेतृत्वको अभावमा मुलुकले एउटा ठूलो सम्भावना गुमाएको छ।

राजा महेन्द्रले भूमिसुधार गर्न नसकेपछि राष्ट्रिय पुँजीको विकासका लागि उनले एउटा अवसर गुमाएका थिए । ०४६ पछि नेपाली कांग्रेसले अर्थतन्त्रको जिम्मा बजारलाई छोडेर अर्को ठूलो अवसर गुमाएको थियो । केपी ओलीका कारणले गर्दा मुलुकले अर्को ऐतिहासिक अवसर गुमाएको छ।

उत्पादन नगर्ने मुलुक सधैं राजनीतिक संकटमा हुन्छ । हामी आज त्यही संकटमा छौं। राजनीतिक नेतृत्वले गरेका बाचा पूरा गर्न नसक्दा जनताले धोका पाएको ठानेका छन्। गणतन्त्रका शक्तिहरुले गणतन्त्रको नेतृत्व गर्न सक्छन् कि सक्दैनन् भन्ने प्रश्न उठेको छ, जसले गर्दा जनतामा निराशा र आक्रोश बढ्दै छ।

कम्युनिष्ट आन्दोलनमा त ठूलो मनोवैज्ञानिक आघात लागेको छ । यही मौकामा सामाजिक लफंगाहरुले सडकमा गणतन्त्रलाई दुत्कारिरहेका छन् । विचार्‌सिद्धान्तको खिल्ली उडाइँदै छ । केपी ओलीले पपुलिष्ट राजनीतिलाई संस्थागत गरेका थिए, त्यसले अरु पार्टीका नेताहरुलाई पनि पपुलिष्ट बनाउँदै थियो । तिनीहरुको पपुलिज्ममा विचार/सिद्धान्तको जलप थियो । आजको अर्थराजनीतिक संकटले विचार/सिद्धान्त केही पनि नमिसिएको विशुद्ध 'नयाँ' पपुलिष्टहरु जन्माएको छ।

जुनसुकै मुलुकको पपुलिज्म पुरानो राजनीति अर्थात् पुराना पार्टीका नालायकीको घोडा चढेर आउँछ। अहिले त्यही भैरहेको छ। प्रधानमन्त्रीका विरुद्ध नाराबाजीका घटना त्यसकै निरन्तरता हुन्।

गएका केही दशक नेपाली कांग्रेस, नेकपा एमालेलगायत राजनीतिको मूलधारमा रहेका भनिने पार्टीहरुको नेतृत्व पंक्तिले दलाल पुँजीवादसँग सम्झौता गरेको थियो र उनीहरुको वर्गउत्थान भएको थियो । आम नागरिकले गणतन्त्रका नायकका रुपमा हेरेका नेताहरुले त्यो भूमिका पूरा नगरेको छलाछुल्ल भएपछि अहिले पुराना पार्टी र पुराना नेता, राज्य (खासगरी सरकार), राजनीति, विचार/सिद्धान्तको विरोध सामाजिक सम्बादको मुख्य विषय बन्दै गएको छ।

पपुलिज्म अहिलेको विश्वव्यापी प्रवृत्ति बनेको छ । नवउदारवादले जुन परिणामको कबोल गरेको थियो, त्यो असफल भैसक्यो भन्ने कुरा विश्व मूलधारका अर्थशास्त्रीहरुले समेत प्रष्टरुपमा भन्न थालेका छन्।

जुनसुकै ठूला प्रयोगले ठूलै प्रभाव पार्छन् । बजारलाई बन्धनमुक्त बनाएर मानिसको जीवनलाई अभाव मुक्त बनाउने नवउदारवादका घोषणाको असफलताले विश्वव्यापीरुपमा राष्ट्रहरुका बीच र राष्ट्रहरुभित्रै तनावहरु बढ्दै छन् । साम्राज्यवादले ती साना वा कमजोर मुलुकका सामाजिक आर्थिक तनावहरुलाई आफ्नो पक्षमा पार्न पपुप्लिज्मको प्रयोग गरेको थियो । साथै, नवउदारवादमा सबैभन्दा सप्रेको सूचना प्रविधि (खासगरी सामाजिक सञ्जाल) लाई औजार बनाएको थियो। तर, आज त्यही पपुलिज्मले स्वयं अमेरिका र युरोपमा अतिदक्षिणपन्थी उभारलाई सघाउँदै छ।

कस्तो संयोग छ भने नेपालमा पपुलिज्मलाई, सूचना प्रविधि/सामाजिक सञ्जाललाई आफ्नो पक्षमा सङ्गठित गर्ने काम केपी ओलीले नै गरेका थिए।

अहिले नेकपा एमाले र नेपाली कांग्रेसको सरकार बनेको छ। ती पार्टी र खासगरी नेतृत्वका कारणले गर्दा यसले संकटको दुश्चक्रलाई समाधान गर्न सक्दैन। संसदीय मूल्यका हिसाबले

बाँकी पेज ५ मा

# नेवार समुदायहरुले मनाए यःमरि पुन्हि पर्व

धान्य पूर्णिमा । मंसीर शुक्ल पूर्णिमालाई नेपालका विभिन्न समुदायले आ-आफ्नै परम्परा अनुसार धुमधामसंग मनाउने गर्दछन् ।

विशेष गरी नयाँ अन्नपात भित्र्याएपछिको खुशियालीमा यो पर्व मनाउने प्रचलन शुरु भएको विश्वास गरिन्छ । नेवार समुदायले आज घरघरमा यःमरि पकाएर खाने र ख्वाएर यःमरि पुन्हि मनाएका छन् । आजको दिनमा नयाँ बाली भित्र्याइ सोही चामलको पिठोबाट यःमरि बनाएर खाने गरिन्छ ।

साथमा उक्त भित्र्याइएको बालीको साथै यःमरि, ल्वंचामरि, कुबेर, गणेश, लक्ष्मी, बिमिरो आदि समेत भकारीमा राखेर पूजा गरिन्छ । यसरी पूजा गरिएको सामग्री आजबाट चार दिनपछि घरको छोरीबेटिले निकाल्ने गर्छन् ।

यसलाई स्वां क्वकायेगु भनिन्छ । यःमरि पुन्हिको दिनबाट औपचारीक रुपमा धान काट्ने कार्य सम्पन्न गरिन्छ । त्यसैले आजको दिनलाई धान्य पुर्णिमा समेत भनिन्छ ।

आजकै दिनमा साँझपख समूह समूह मिलेर गीत गाउँदै घरघरमा यःमरि माग्न जाने चलन पनि रहेको छ । यसरी यःमरि माग्न जानेलाई त्यःछिंत्यः भनिन्छ । त्यःछिंत्यःको चलन भने अचेल हराउँदै गएको छ ।

नेवार समुदायमा यःमरि पुन्हिसँग सम्बन्धित एउटा ऐतिहासिक लोककथा प्रचलित छ । पाञ्चाल देशमा सुचन्द्र नाम गरेका दानी, परोपकारी महाजन आफ्नो परिवारसँग बस्दथे । एकदिन कुबेरलाई उत्त महाजनको परिक्षा लिन मन भएछ ।

कुबेरले एक दरिद्रको भेष बनाएर सुचन्द्रको घरमा पुगेछन् । घरमा एउटा दिनहीन अवस्थाको दरिद्र मानिस भिक्षा माग्न आएको देखी सुचन्द्र र उनकी पत्नीले भिखारीको स्वागत सत्कार गरी मीठामीठा खानेकुरा दिएछन् ।

सुचन्द्र र उनकी पत्नीले गरेको व्यवहारबाट प्रसन्न भएर कुबेरले उनलाई आफ्नो सक्कली रुपको दर्शन दिए र ज्ञानको साथमा एउटा बिमिरो समेत प्रदान गरी अन्तर्ध्यान भए ।

कुवेरले प्रदान गरेको सद्बुद्धि र अर्ती अनुसार सुचन्द्रकी पत्नीले तिलको धुलो र चाकुको झोल मिश्रित पदार्थ राखी चामलको पिठोको रोटी यःमरि अनि त्यहि चामलको पिठोको कुवेर समेत बनाई अन्न राख्ने भकारीभित्र राखेर पूजा गरिछन् ।

अनि कुवेरले प्रदान गरेको बिमिरोलाई पनि त्यहीं विधिपूर्वक स्थापना गरी चार दिनसम्म छोपेर राखी पूजा गरिन् । यसरी कुबेरको आराधना र पूजा गरेकाले त्यसको प्रभावले सुचन्द्रको घरमा धन सम्पत्तिको बृद्धि हुनगई दैनिक आम्दानीमा बढोत्तरी हुनगयो ।

त्यसै बेलादेखि धान्यपूर्णिमाका दिन योमरी बनाएर कुबेर र लक्ष्मीको पूजा गरी पर्व मनाउने चलन चलेको विश्वास छ ।

क्षेत्री ब्राह्मण समुदायले आजको दिनलाई देवाली पूर्णिमाको रुपमा मनाएका छन् । यस दिन उनीहरुले कुलपूजा तथा गोठ पूजा गरी मनाउने गर्दछन् ।

उता, पूर्वी पहाडी जिल्लाहरुमा किरात समुदायको उधौली पर्व आजदेखि शुरु भएको छ । वर्षायाममा लेकतिर राखिएका गोठ आजको दिनदेखि बेंसीतिर सार्ने भएकाले यो पर्वलाई उधौलीको रुपमा मनाउने गरिएको हो ।

उधौली पर्व किरात समुदायको दोस्रो ठूलो चाड पनि हो । यो पर्व उनीहरुले १५ दिनसम्म मनाउने गर्दछन् । केही वर्ष यता उपत्यकामा बस्ने किरात समुदायले उपत्यकामै उधौली मनाउने चलन पनि बढ्दो छ ।

तराई क्षेत्रमा पनि धान्य पूर्णिमालाई भब्य रुपमा मनाउने गरिन्छ ।

# प्रतिबन्धित क्रिप्टोमा हजारौं नेपालीले दैनिक गर्छन् अबौंको कारोबार

काठमाडौं । नेपालमा क्रिप्टोकरेन्सीको कारोबार गर्न पाइँदैन । क्रिप्टोकरेन्सीको कारोबारसम्बन्धी कुनै कानुनी व्यवस्था छैन । विभिन्न समयमा सार्वजनिक सूचना जारी गर्दै केन्द्रीय बैंकले क्रिप्टोको कारोबार र माइनिङको काम गर्न नपाइने बताइरहेको छ ।

तर पनि हजारौं नेपालीहरूले भने दैनिक ठूलो मात्रामा क्रिप्टोकरेन्सीको कारोबार गर्दै आएका छन् । जुन कारोबार उनीहरूले बैंकिङ प्रणालीसँग आबद्ध भएर नै गरिरहेका छन् । विशेषगरी विश्वमा क्रिप्टो एक्सचेञ्ज कारोबार गर्ने प्रतिष्ठित साइटमा भइरहेको संलग्नता र कारोबारबारे अध्ययन गर्दा यस्तो देखिएको हो ।

कसरी भइरहेछ कारोबार ?

नेपालमा क्रिप्टो कारोबारबारे कुनै कानुनी व्यवस्था छैन । त्यहीकारण केन्द्रीय बैंकले पनि समय समयमा क्रिप्टोको कारोबार गर्न नपाइने सूचना जारी गर्दै आएको छ ।

त्यहीकारण वैधानिक हिसाबले क्रिप्टोको कारोबार निषेधित छ । त्यतिमात्रै होइन, क्रिप्टोको कारोबार गर्ने एक्सचेञ्ज एप्लिकेशन र वेबसाइटमा पनि सरकारले पहुँच रोक्ने प्रयास गरेको छ । तर पनि, हजारौं नेपालीले क्रिप्टोको कारोबार गर्ने विभिन्न एप्लिकेशन र वेबसाइटका माध्यमबाट दैनिक ठूलो रकमबाट क्रिप्टो कारोबार गर्ने गरेको पाइन्छ ।

विशेषगरी बाइनान्स, क्वाइन मार्केट क्याप, क्वाइनबेस लगायतका सयौं प्लेटफर्महरू क्रिप्टो कारोबारका लागि विश्वमा स्थापित छन् । तीमध्ये दर्जनौं एप्लिकेसन र साइटहरूमा इन्टरनेटमार्फत् नेपालमा पनि सहज पहुँच भएको देख्न सकिन्छ । विशेषगरी विश्वभरका अधिक प्रयोगकर्ताले प्रयोग गर्ने बाइनान्समा गरिएको अध्ययनमा दैनिक हजारौं नेपाली प्रयोगकर्ताले क्रिप्टो कारोबारका लागि उक्त प्लेटफर्म प्रयोग गर्ने गरेको पाइएको छ ।

नेपालको केन्द्रीय बैंकले बैंकिङ प्रणालीमार्फत् सिधै क्रिप्टोको कारोबार गर्न प्रतिबन्ध लगाएकाले कारोबारीहरूले त्यसका लागि घुमाउरो बाटो प्रयोग गर्ने गरेको देखिन्छ ।

क्रिप्टोको कारोबार गर्ने प्लेटफर्महरूले कारोबार गर्नका लागि सामान्यतः २ वटा माध्यम उपलब्ध गराएका हुन्छन् । एउटा नेपाल स्टक एक्सचेञ्ज (नेप्से)मा कारोबार गरेजस्तै रियल टाइममा खरिद बिक्री गर्ने र अर्को उक्त प्लाटफर्मलाई माध्यम बनाएर व्यक्ति-व्यक्तिबीचमा अर्थात् 'पिटुपी' मोडेलमा कारोबार गर्ने ।

एक्सचेञ्ज कम्पनीकै प्लाटफर्मलाई आधार बनाएर कति नेपालीले कारोबार गर्छन्, त्यो अध्ययन जटिल हुन्छ । उक्त प्लाटफर्ममा विश्वभरका करोडौं मानिस सहभागी भइरहेका हुन्छन् । तर, प्लाटफर्मले दिएको पिटुपी माध्यममा गएर भने कति नेपालीले रियल टाइममा कारोबार गरिरहेका छन् भनेर सजिलै हेर्न सकिन्छ । तर, त्यसका लागि सदस्य बन्नुपर्ने हुन्छ ।

बाइनान्समा उपलब्ध पीटुपी प्लेटफर्ममा रियल टाइममा सयौं नेपालीले मोबाइल वालेटहरू ईसेवा, खल्ती, आइएमई पे र विभिन्न बैंकहरूबाट भुक्तानी गर्नेगरी क्रिप्टोको कारोबार गरिरहेका हुन्छन् । जहाँ आफूले चाहेको क्रिप्टो सजिलै खरिद गर्न र बिक्री गर्न सकिन्छ ।

जसका लागि आफ्नै मोबाइल वालेट वा बैंक खातामार्फत् नेपाली रूपैयाँमै खरिद गरेको क्रिप्टोको भुक्तानी र आफूले बिक्री गरेको क्रिप्टोको आम्दानी गर्न सकिन्छ ।

नेपालमा क्रिप्टो कारोबार वैधानिक नभएकोले काराबारीहरूले प्लाटफर्ममा आफ्नो नाम वास्तविक राखेका हुँदैनन् । तर, कारोबार गर्ने अवस्थामा पुगिसकेपछि दुवै पक्षले व्यक्तिगत खाताको आदान-प्रदान गर्नुपर्ने हुन्छ ।

सामान्यतः क्रिप्टो प्लेटफर्ममा पीटुपी कारोबार गर्दा नाफा घाटाको मात्रै प्रश्न नभएर कुनै एक पक्ष स्क्यामरबाट ठगिने सम्भावना पनि हुन्छ । अर्थात्, पहिलो पक्षले बिक्री गरेपछि भुक्तानी नपाउन सक्छ वा दोस्रो पक्षले अग्रिम भुक्तानीपछि पनि क्रिप्टो नपाउन सक्छ । जुन जोखिमलाई सम्बन्धित प्लाटफर्मले जिम्मा लिँदैन ।

कसरी हुन्छ अनुगमन ?

क्रिप्टो कारोबारमा प्रतिबन्ध लगाए पनि नेपाल राष्ट्र बैंकले अहिले विभिन्न माध्यमबाट नेपालीको सहभागितामा के-कसरी कारोबार भइरहेको छ भन्ने अध्ययन-अनुगमन नगरेको राष्ट्र बैंकका सह-प्रवक्ता डिल्लीराम पोखेलले बताएका छन् । उनले उक्त विषयमा अन्य अनुसन्धान गर्ने र कारबाही गर्ने निकायको भूमिका रहेको हुनसक्ने बताए ।

'राष्ट्र बैंकले क्रिप्टो कारोबारलाई प्रतिबन्ध लगाएको छ, तर यसको कारोबार भइरहेको सन्दर्भमा अनुसन्धान वा कारबाही गर्ने निकायका रुपमा साइबर ब्यूरोले काम गर्दै आएको छ', उनले भने, 'त्यस्तो कारोबारकर्तामाथि कहिलेकाहीँ अनुसन्धान पनि हुने गरेको देखिएको छ ।'

नेपाल प्रहरीको साइबर ब्यूरोका प्रवक्ता दीपकराज अवस्थीले जनशक्ति अभावका कारणले पछिल्लो समयमा ब्यूरोले क्रिप्टोकरेन्सी कारोबारको विषयमा अध्ययन नगरेको बताएका छन् ।

'जनशक्ति अभावका कारण क्रिप्टोकरेन्सी कारोबारको विषय हेर्ने गरेका छैनौं, प्राविधिक विषय हेर्न परे मात्रै अध्ययन गर्ने गरेका छौं', उनले भने ।

## नेपाली .

यिनीहरु दुई ठूला पार्टीहरु मिलेर बनेका छन् । विचारका हिसाबले दुबै समाजवादी र पुँजीवादी हुन् । राजनीतिक हिसाबले अदालतको परामादेशद्वारा सरकारमा पुऱ्याइएका र सरकारबाट निकालिएका पार्टीहरु हुन् । प्रवृत्तिका हिसाबले सत्ताका लागि जेसुकै गर्न तयार नेताहरु हुन् । यसले गर्दा यिनीहरुबाट मुलुकका समस्याको समाधान हुने कुनै सम्भावना छैन । यिनका भूराजनीतिक लगावका कारण पनि त्यो गर्न सक्दैनन् । यिनीहरुले अगाडि सारेको संविधान संशोधनको मुद्दाले राजनीतिक अन्तरविरोधलाई अझ बढाउने छ । अर्थात्, अब यिनीहरुले जेसुकै गरे पनि समस्या बढ्दै जानेछ । सत्ताको विरोध अझ बढ्छ ।

सत्ता गठबन्धनले विरोधको जवाफ दमन र षडयन्त्रबाट दिने प्रयत्न गर्छ । त्यसले पपुलिष्ट अराजकतालाई अझ बढाउने छ । अराजकता र दमन बढ्दै जानेछ र मुलुक अझै डरलाग्दो अराजकताको खाडलतर्फ जान सक्छ । संक्षेपमा, सत्ता फासिष्ट बन्दै जाने र सडक अराजक बन्दै जान सक्छ ।

दोस्रो, यिनीहरु (कांग्रेस एमाले) का स्वार्थ र भूराजनीतिक कारणले यो गठबन्धन तोडियो भने यसको ठाउँमा अनेकौं पार्टीका स्वार्थहरुको नयाँ गठबन्धन सरकार बन्न सक्छ । त्यस्तो गठबन्धन राजनीतिकरुपमा वर्तमान गठबन्धनभन्दा निसन्देहरुपले कमजोर हुनेछ । किनकि वर्तमान संसदभित्र बन्न सक्ने गठबन्धनमध्ये अहिलेको गठबन्धन सबैभन्दा बलियो गठबन्धन हो । यसका ठाउँमा बन्न सक्ने कमजोर गठबन्धनले पनि मुलुकलाई अझ डरलाग्दो अस्थिरता र अराजकतातर्फ लैजान नै मद्दत गर्ने छ ।

तेस्रो, पुनरुत्थानवादी र पपुलिष्ट शक्तिहरुलाई एकठाउँमा ल्याउने प्रयत्न हुन सक्छ । तर, तिनीहरुले ठूलै राजनीतिक पहलकदमीको नेतृत्व गर्न भने सजिलो छैन ।

त्यसैले सरकारको अकर्मण्यता र त्यसको विरोध सँगसँगै ०८४ सम्म यो गठबन्धन टिक्न पनि सक्छ । तर, त्यसले अर्थराजनीतिक तनावलाई बढाइरहने छ र ०८४ सालको निर्वाचनपछि मुलुकको राजनीतिक परिस्थिति अझ असामान्य रुपले बिग्रिँदै जान सक्छ ।

(नेकपा एकीकृत समाजवादीको जारी बैठकमा भुसालले प्रस्तुत गरेको 'आन्दोलनद्वारा पार्टी निर्माण' शीर्षकको दस्तावेजको अंश)

# रोक्न नसकिएको एन्टिबायोटिकको दुरुपयोग

**डा अखण्ड उपाध्याय**

- ३ महिनाको बच्चा बोकेर जिल्ला अस्पतालको ओपीडीमा आउनुभएकी डोल्पा, त्रिपुरासुन्दरी नगरपालिकाकी आमालाई 'के समस्या भयो' भनेर सोध्दा उहाँले जवाफ दिनुभयो- बच्चा कन्छ, रोएको रोयै गर्छ। कहिलेकाहीँ दूध नै बान्ता गर्छ, तर ज्वरो छैन। दूध पनि राम्ररी खान्छ, कोखा हान्दैन, श्वास फेर्न पनि गाह्रो छैन।

यही समस्या लिएर स्थानीय मेडिकल गएर जचाउँदा औषधि दिएछन्। उहाँले मेडिकलबाट दिएको सेफिक्जिम, एमोक्सिसिलिन अनि पारासिटामोल झोलाबाट झिकेर देखाउनुभयो। त्यो औधषि खुवाएको ५ दिनमा पनि कमी नभएपछि यहाँ आउनुभएको रहेछ। ३ महिनाको बच्चालाई आवश्यकता नै नपर्ने २ वटा एन्टिबायोटिक बेचेछन् मेडिकलवालाले, त्यो पनि चाहिनेभन्दा बढी डोजमा।

- डोल्पाकै काइके गाउँपालिका बस्ने वर्ष ३२ को पुरुष २ दिनदेखि कानमा केही हिँडेजस्तो लागेको भन्दै त्यहीँ एक प्राइभेट औषधि पसलमा गएर समस्या राखेछन्। उक्त समस्यामा कान जाँच नगरी, त्यहाँ के छ नहेरी एमोक्सिकल्याभ ६२५ एमजीको अनि कानमा हाल्ने सिप्रोफलोक्सासिन ड्रप दिएछन्।

त्यो २ वटै औषधि प्रयोग गरेको ३ दिनमा पनि कानको समस्या कम नभएपछि उनी अस्पतालमा देखाउन आए। अटोस्कोपले हेर्दा किरा कानमा रहेछ। कान सफा गरेर किरा फालेपछि समस्या कम भयो। बिरामीलाई ३ दिन खाइसकेपछि अब ५ दिनको डोज पूरा गर्नु भनेर पठायौँ।

- ठूलीभेरी- ८ जुफाल बस्ने वर्ष २२ की बहिनीको स्तनमा गाँठो आएको २ महिना भएछ। क्यान्सरको डरले जँचाउन स्थानीय मेडिकलमा जाँदा डल्लो सुकाउने औषधि भनेर क्लकसासिलिन, एजिथ्रोमाइसिन, सिटामोल, प्यान्टप दिएर पठाएछन्। तर ७ दिनसम्म औषधि खाँदा पनि डल्लो नगएपछि जँचाउन उनी दुनै आइन्। करिब ५ मिनेटको काउन्सिलिङ र सामान्य औषधि लगेर उनी विश्वस्त भई घर गइन्। करिब १ महिनापछि उक्त डल्लो कम भयो भन्दै फलोअपमा आइन्। स्थानीय मेडिकलले २ वटा कडा एन्टिबायोटिक यत्तिकै खान लगाए। जुन औषधि उनको समस्यामा पर्दैनथ्यो।

यी माथिका ३ वटा घटना प्रतिनिधि मात्र हुन्। यस्ता घटना गाउँदेखि शहरसम्म क्षेत्रमा उत्तिकै हुने गरेका छन्। तर दुर्गममा अझ बढी छ भन्दा फरक नपर्ला।

एण्टिबायोटिक व्याक्टेरिया भन्ने जीवाणुबाट हुने संक्रमणलाई निको पार्नका लागि प्रयोग गरिने औषधि हो। अझ भनौँ, यो जीवनरक्षक औषधि हो। तर माथिका ३ वटा घटनामा जसरी यसको प्रयोग भइरहँदा प्रतिजैविक प्रतिरोध बढाएको प्रष्ट देखिन्छ। चिकित्सकीय सल्लाह बिना औषधि पसलेहरुले जथाभावी एन्टिबायोटिक बेचिदिनाले विस्तारै एण्टिबायोटिकले पनि काम गर्न छाडेको छ।

चिकित्सक भेट्न जिल्ला अस्पतालमै पुग्नुपर्ने बाध्यतामा रहेका दुर्गमका नागरिकलाई औषधि पसलेहरुले रुघा, खोकी लाग्दा, सामान्य जीउ दुख्दा पनि २/३ वटा एण्टिबायोटिक दिने गरेका छन् भने बिरामीहरु पनि 'मलाई चट्ट सन्चो हुने कडा औषधि दिनुहोस्' भन्दै एण्टिबायोटिक किनेर खाने प्रवृत्तिले यस्ता औषधिहरु ब्याक्टेरिया प्रतिरोधी बनिरहेका छन्।

गाउँघरमा त औषधि साट्ने प्रवृत्तिले पनि यसको प्रयोग जथाभावी भइरहेको हामीले देखेका छौँ। एक जनाले ज्वरो आउँदा खाएको एन्टिबायोटिक अर्कोलाई ज्वरो आउँदा दिने प्रवृत्ति दुर्गमतिर निकै देखिन्छ। दुर्गममा काम गरिरहँदा सबैभन्दा बढी दुरुपयोग भइरहेको एण्टिबायोटिक भनेकै एजिथ्रोमाइसिन, एमोक्सिसिलिन जुन औषधि पसलेले भाइरल रुघा खोकीमा पनि दिने गरेको छ भने बिरामीले पनि सामान्य खोकी लाग्दा पनि आफैँले किनेर खाने गरेका छन्। त्यस्तै घाँटी दुख्दा बित्तिकै एमोक्सिकल्याभ बेच्ने औषधि पसले छन्। कडा औषधि दिनुहोस् भनेर माग्ने बिरामी पनि छन्।

विश्व एण्टिबायोटिक जागरुकता सप्ताह शहरमा धुमधामका साथ मनारहँदा दूरदराजका जनतालाई एण्टिबायोटिकको उचित प्रयोगका बारेमा जनचेतना जगाउन हामी चिकित्सकले पनि बिर्सिरहेका छौँ भने यस क्षेत्रमा काम गर्ने संघसंस्थाले पनि बिर्सेका छन्।

नेपालमा आजको दिनसम्म पनि चिकित्सकको प्रेस्किृप्सन बिना एण्टिबायोटिक खरिदबिक्री गर्न पाउने हुनाले पनि यसको जथाभावि हुने प्रयोग रोक्न सकिएको छैन। अबका दिनमा हरेक स्वास्थ्यकर्मीले एण्टिबायोटिकको प्रयोगमा सावधानी अपनाउन बिरामीलाई चेतना दिनैपर्छ। जस्तो कि:

१. चिकित्सकको सल्लाहबिना एण्टिबायोटिकको प्रयोग नगर्न भन्नेर आम सर्वसाधारणलाई बुझाउने।

२. औषधि पसलले प्रेस्क्रिप्सन बिना एण्टिबायोटिक बिक्री गर्न रोक लगाउने जसका लागि स्थानीय सरकार तथा प्रशासनको सहयोग लिने।

३. साना बालबालिकालाई उपचारका लागि औषधि उपयोग गर्दा अभिभावकले सतर्कता अपनाउने।

४. स्वास्थ्यकर्मीले औषधि दिँदा औषधिको बारेमा सोध्न र स्वास्थ्यकर्मीले जानकारी दिन सचेतना जगाउने।

अन्त्यमा, हाल नेपाल जस्तो देशमा स्वास्थ्य सेवामा असमान पहुँच भएकै कारण एण्टिबायोटिकहरुले गलत प्रयोग बढ्दै गएको छ भने नियमनकारी सरकारी संयन्त्र पनि दूरमा पुग्न सकेको छैन। गलत प्रयोगका कारण वर्षेनी एण्टिबायोटिकका विरुद्ध ब्याक्टेरियाले प्रतिरोधी क्षमता विकशित गर्दै गएको छ। तसर्थ यसको गलत प्रयोगलाई रोकेर भविष्यमा देशकै स्वास्थ्य प्रणालीमा आउन सक्ने क्षति कम गर्न शहरमा मात्र नभएर गाउँगाउँमा पनि सही प्रयोगका लागि चेतना जगाउन हरेक क्षेत्रले सहकार्य गर्नै पर्छ।

(डा उपाध्याय डोल्पा जिल्ला अस्पतालका मेडिकल अधिकृत हुन्।) स्वास्थ्यखबर

ब्रिमTIMES

# रोमाञ्चक बन्दैछ नेपाल प्रिमियर लिग क्रिकेट




काठमाडौं । काठमाडौंमा जारी नेपाल प्रिमियर लिग (एनपीएल) क्रिकेट अत्यन्त प्रतिस्पर्धात्मक तथा रोमाञ्चक खेलहरुकासाथ प्लेअफ चरणमा पुगेपछि अझ रोचक बन्ने देखिएको छ । हालसम्म सम्पन्न २८ वटा खेलका नतिजाले आगामी खेलहरुले नेपालमा क्रिकेटको लोकप्रियतालाई झन् उचाइमा लैजाने स्पष्ट छ ।

नेपालका सबै प्रदेशको प्रतिनिधित्व गरेका आठ टोलीमध्ये चार टोली शीर्ष स्थानमा पुगेका छन् । यसमध्ये सर्वाधिक १२ अंक हासिल गर्न सफल सुदूरपश्चिम रोयल्स तथा अंक तालिकामा १० अंक प्राप्त गरेर दोस्रो स्थानमा पुगेको जनकपुर बोल्डसबीच पुस ३ गते बुधबार दिउँसो प्रतिस्पर्धा हुँदैछ । शीर्ष दुई स्थानमा पुगेका यी दुई टोलीबीच क्वालिफायरमा भिडन्त हुन लागेको हो । यसमा जित्ने टोली फाइनलमा पुग्नेछ । सुदूरपश्चिम र जनकपुर दुवै टोलीले अत्यधिक म्याच जितेकाले दुवै टोलीका खेलाडीहरुमा उच्च मनोबल रहेको पाइएको छ । दुवै टोलीले प्रतियोगता जित्ने दाबी गर्दै आएका छन् ।

सुदूरपश्चिम टोलीका कप्तान दीपेन्द्रसिंह ऐरीले सुरुदेखि नै उपाधि जित्ने बताउँदै आएका थिए । विश्वको सर्वोच्च शिखर सगरमाथाको कालापत्थरको ढुंगा अंकित ट्रफी आफ्नो प्रदेशमा लैजान सफल हुने कप्तान ऐरको आत्मविश्वास रहेको छ । एनपिएलको पहिलो म्याचमा विराटनगर किंसलाई सहज रुपमा पराजित गरेर आफ्नो बलियो उपस्थिति देखाएको जनकपुर टोलीका कप्तान अनिल शाह पनि मधेश प्रदेशमा ट्रफी भित्र्याउन दृढ रहेका छन् ।

यी दुवै टोलीले विगतका म्याचहरुमा ब्याटिङ, बलिङ प्रदर्शन गर्दै दर्शकहरुको मन जितेका छन् । एनपीएल क्रिकेटमा खेल्न विभिन्न कीर्तिपुर रंगशालामा दिनहुँ भइरहेको दर्शकहरुको भीडले गर्दा अत्यन्त लोभिएका छन् । सुदूरपश्चिम तथा जनकपुरको म्याच भएको बखत कीर्तिपुर रंगशालामा दर्शकको संख्या अत्यधिक हुने गरेकाले बुधबारको खेलमा पनि दर्शक व्यवस्थापन चुनौती हुन सक्ने आकलन गरिएको छ । सुदूरपश्चिम टोलीका समर्थकहरुले देउडा तथा जनकपुरका समर्थकहरुले स्थानीय भाखामा नाचगान गरेर माहौल रमणीय बनाउँदै आएका छन् ।

खेलमा पूर्वानुमान गर्न कठिन हुन्छ । एनपिएलमा सशक्त उपस्थिति देखाएको सुदूरपश्चिम तथा जनकपुर जस्तो टोलीलाई पराजित गर्न सफल चितवन राइनोज टोली अहिले अंकको आधारमा तेस्रो स्थानमा रहेको छ । बुधबार बिहान समान ८ अंक प्राप्त गरेको चितवन राइनो तथा कर्णाली याक्सबीच खेल हुँदैछ । तर काठमाडौं गुर्खाजले पनि समान आठ अंक हासिल गरे तापनि रनरेटका आधारमा प्लेअफबाट बाहिरिनु पर्यो । लिग चरणमा चितवन टोली कर्णालीसँग सात रनले पराजित भइसकेको भएता अब हुने 'इलिमिनेटर' प्रतिस्पर्धा चितवन र कर्णाली टोलीका लागि महत्वपूर्ण मानिएको छ । क्वालिफायरमा पराजित हुने टोलीसँग इलिमिनिटरमा जित्ने टोलीले खेल्नेछ । विजयी हुने टोलीका लागि फाइनलको ढोका खुल्ला हुनेछ ।

नेपालीलाई सफलता: एनपीएलमा हालसम्म सबैभन्दा बढी विकेट अतिथि खेलाडी स्कट कुगेलेइनले १३ लिन सफल भएका छन् । त्यसपछि नेपालका ललित राजवंशी र रिजन ढकालले समान १३ विकेट लिएर आफ्नो क्षमतालाई प्रदर्शन गरेका छन् । करण केसीले भने १२ विकेट लिएका थिए । यसैगरी सर्वाधिक २७९ रन रोहित पौडेलले लिन सफल भएका छन् । उनी पछि सर्वाधिक रन लिनेमा अतिथि खेलाडीहरु छन् । तर नेपाली खेलाडीहरुले पनि सयौं रन लिन सफल भएका छन् ।

सर्वाधिक रन लिनेको सूचीमा चौंथो स्थानमा रहेका नेपाली कुशल मल्लले २०२ रन तथा दिपेन्द्रसिंह ऐरीले १९८ रन लिन सफल भएका छन् । न्युजिल्याण्डबाट एनपिएल खेल्न आएका दिनेश खरेलले १६२ रन तथा अष्ट्रेलियाबाट आएका किशोर महतोले १० विकेट लिएर विदेशबाट खेल्न बोलाइएका नेपालीहरुको सशक्त उपस्थिति देखाएका छन् । अवसरको खोजीमा विभिन्न मुलुकमा रहेका नेपाली क्रिकेटरहरुलाई नेपाल क्रिकेट संघ (क्यान) ले स्वदेशमा पहिलोपटक आयोजित एनपीएल खेल्न बोलाएर उनिहरुको प्रतिभाको कदर गरेको छ ।

यसरी नेपाली तथा विभिन्न मुलुकका चर्चित क्रिकेट खेलाडीहरुले एकै टोलीमा रहेर खेलिरहेको यो प्रतियोगिता उपलब्धिमूलक बनिरहेको छ । प्रतियोगितामा नेपाली युवा खेलाडीहरुलाई पनि खेल्ने अवसर दिइएबाट उनीहरु प्रोत्साहित हुन पुगेका छन् । खुल्ला प्रतिस्पर्धाबाट छनोट भएका युवा प्रतिभाहरुले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय खेलाडीहरुसँग एउटै टोलीमा रहेर खेल्न पाउनु सानो अवसर होइन । एनपीएल क्रिकेटमा खेल्न विभिन्न मुलुकबाट आएका क्रिकेट स्टारहरु कीर्तिपुर रंगशालामा दिनहुं भैरहेको दर्शकहरुको भिडले गर्दा लोभिएका छन् ।

कीर्तिपुरमै बास : कीर्तिपुर रंगशालाको वरिपरि ओछ्यान ओछ्याएका पनि देखिन्छन् । रंगशाला प्रवेशद्वार नजिक खानेकुराका साथै अन्य सामग्री बेच्नका लागि ठाउँ ओगटन व्यापारीहरु खुल्ला आकाशमै सुत्ने गरेका छन् । तापक्रम घटेर जाडो बढिरहेको समयमा पनि कीर्तिपुरमा भने क्रिकेटप्रेमीहरुको बिहान सबेरै देखि घुईंचो लाग्ने गरेको छ । टिकट किनेर चिसो चौरमा बस्दै क्रिकेट हेर्दा पनि दर्शकहरुको उत्साहमा भने कमी देखिएको छैन । काठमाडौं बाहिरका केही टोलीले म्याच हेर्न काठमाडौं आउनका लागि निःशुल्क बसको व्यवस्था गरेर खेलप्रेमीहरुलाई हौसला दिएका छन् । कीर्तिपुर रङ्गशालामा दर्शकहरुले गरेका फोहर सफा गर्ने काममा पनि क्रिकेटप्रेमी युवाहरुले सक्रियता देखाएका छन् ।

नेपालमा एनपीएलका लागि अनुवन्ध भई आएका विश्व प्रसिद्ध क्रिकेट खेलाडीहरुको नेपालको गतिविधिले विदेशमा नेपालको प्रचार भइरहेको छ । उनीहरुले विभिन्न भागको भ्रमण गरेर नेपालको पर्यटन प्रवर्द्धन गरेका छन् । भारतका चर्चित क्रिकेट खेलाडी शिखर धवनले पहिलो पटक एनपिएलमा खेल्न नेपाल आएर सगरमाथा आधार शिविरको भ्रमण गर्न समेत भ्याएका थिए । कर्णाली याक्सका तर्फबाट वटा खेलपछि स्वदेश फर्किएका धवनले सगरमाथा क्षेत्रमा बिताएको क्षणका तस्बिर तथा समाचार विभिन्न अन्तर्राष्ट्रिय माध्यमले समेत महत्व दिएर प्रकाशित गरेका थिए । एनपिएल क्रिकेट हेर्न नेपाल आएका विश्व विख्यात क्रिकेटर ब्रायन लाराको नेपाल भ्रमणले पनि विश्वमा नेपाललाई चिनाउन मदत गरेको छ । उनले पनि सगरमाथा क्षेत्रको भ्रमण गरेका थिए ।

कमेण्टेटरको कमाल : एनपीएल क्रिकेट प्रतियोगिताको प्रत्यक्ष प्रशारणको माध्यमबाट विश्वमा नेपालको ब्यापक रुपमा प्रचार भैरहेको छ । एक्सन स्पोर्टस अन्तर्राष्ट्रिय टेलिभिजनले क्रिकेट प्रतियोगिताका साथै नेपालको पर्यटन प्रवर्द्धन पनि गरिरहेको छ । क्रिकेटको प्रत्यक्ष प्रशारणमा विश्वमै ख्याती कमाएका कमेण्टेटरहरुले दिनहुँजसो नेपालको हिमाल, कला संस्कृति तथा जनजीवनका बारेमा मुक्त कण्ठले प्रशंसा गरिरहेका छन् । उनीहरुले अङ्ग्रेजी भाषामा नेपाली खाजा म:म:देखि भक्तपुरको जुजु धौ समेतको बारेमा विश्वको विभिन्न देशमा प्रचार गरिरहेका छन् । बेलाबेलामा ड्रोनको माध्यमबाट देखाइने गरिएको काठमाडौं उपत्यकाको रमणीय दृश्यले भविष्यमा पर्यटक बढाउन महत्वपूर्ण योगदान गर्ने अपेक्षा गरिएको छ ।

आगामी दिनको सम्भावनाको ढोका खोल्न पनि योगदान गरिरहेका छन् । तर नेपालमा सयौं टेलिभिजन भएता पनि एनपीएल हेर्न विदेशी च्यानलको भर पर्नुपर्ने तथा पर्ने तथा अंग्रेजी नबुझ्नेहरुका लागि खेलका गतिविधि बुझ्न कठिनाइ भैरहेको छ ।

# एनपिएल विजेताले १ करोड १० लाख पाउने



काठमाडौं । नेपाल क्रिकेट संघ (क्यान)ले सिद्धार्थ बैंक नेपाल प्रिमियर लिग (एनपिएल) को पुरस्कार राशी घोषणा गरेको छ । एपिएलको विजेताले १ करोड १० लाख रुपैयाँ पुरस्कार प्राप्त गर्नेछ । नेपाली खेलकुदमा विजेता टोलीले पाउने अहिले सम्मकै ठूलो राशि हो । दोस्रो हुने टोलीले ५१ लाख, तेस्रो टोलीले २५ लाख र चौथो १५ लाख प्राप्त गर्ने क्यानको प्रेस विज्ञप्तिमा उल्लेख गरिएको छ ।

एनपिएलको शीर्ष ४ टोलीले २ करोड १० लाख रुपैयाँ पाउने भएको छ । यसअघि क्यानले उत्कृष्ट नेपाली खेलाडीलाई कार दिने बताइसककेको छ । यसबाहेक क्यानले प्रत्येक खेलको प्लेयर अफ दी म्याचलाई ५० हजार र क्याच अफ दी म्याच हुनेलाई २५ हजार प्रदान गर्दै आएको छ ।

एनपिएल अन्तर्गत लिग चरणका कुल २८ खेल सकिए सँगै प्लेअफ समीकरण पूरा भएको छ । एनपिएलको लिग चरणको अन्तिम खेल सोमवार समाप्तिसँगै प्लेअफ समीकरण पूरा भएको हो ।

लिग चरणको समाप्तिमा सुदूरपश्चिम रोयल्स शीर्षमा, जनकपुर बोल्ट्स दोस्रोमा, चितवन राइनोज तेस्रो र कर्णाली याक्स चौथोमा रहेर प्लेअफमा छनोट भए । एनपिएलको प्लेअफको पहिलो खेल बुधवार बिहान ९ बजे तेस्रो स्थानको चितवन र चौथो स्थानको कर्णालीबीच हुनेछ । त्यो इलिमिनेटर खेल हुनेछ । त्यस खेलको विजेता टोलीले फाइनल प्रवेशका लागि दोस्रो क्वालिफायरमा प्रवेश पाउनेछ । पराजित हुने टोली एनपिएलबाट बाहिरिने छ ।

बुधवार दिउँसो १ बजे प्लेअफको दोस्रो खेल हुनेछ । प्लेअफको दोस्रो खेल पहिलो क्वालिफायर खेल हुनेछ । त्यसमा शीर्ष स्थानको सुदूरपश्चिम र दोस्रोको जनकपुर बोल्ट्सबीच प्रतिस्पर्धा हुनेछ । पहिलो क्वालिफायर खेलको विजेता टोली स्वत: फाइनल पुग्नेछ । त्यसमा पराजित हुने टोलीले फाइनल प्रवेशका लागि अर्को मौका पाउनेछ ।

पहिलो क्वालिफायरको पराजित टोली र इलिमिनेटरको विजेताबीच दोस्रो क्वालिफायर खेल हुनेछ । त्यसको विजेता फाइनल पुग्ने दोस्रो टोली हुनेछ । पहिलो संस्करणको एनपिएलको फाइनल शनिवार दिउँसो १२ बजे सुरु हुनेछ ।

जनकपुरले पहिलो क्वालिफायरमा सुदरसँग खेल्नेछ । चितवन राइनोज, कर्णाली याक्स र काठमान्डु गुर्खाजले समान ४ खेल जित्दै ८/८ अंक जोडे् । रन रेटमा चितवन तेस्रो र कर्णाली चौथो हुँदै प्ले अफमा पुगेको हो । कम रन रेटको आधारमा काठमान्डु गुर्खाज भने लिग चरणबाट नै बाहिरिएको थियो ।

# फाल्गुनन्द गोल्डकप– उद्घाटन खेल आयोजक र करसाङबीच हुने




काठमाडौं । सदरमुकाम फिदिममा शनिवार सुरु हुने ११ औं फाल्गुनन्द गोल्डकपको खेल तालिका सार्वजनिक गरिएको छ । आयोजक फिदिम स्पोर्टिङ क्लबले सामाजिक सञ्जाल मार्फत गोल्डकपको खेलतालिका सार्वजिक गरेका हुन् । उद्घाटन खेलमा आयोजक फिदिम स्पोर्टिङ क्लबले पाहुना टोली करसाङ एफसी भारतसँग प्रतिस्पर्धा गर्नेछ । मच्छिन्द्र एफसी र झापा ११ फुटबल क्लबबीच पुस ७ गते दोस्रो खेल हुनेछ ।

त्रिभुवन आर्मी एफसी र झापाको न्यू स्टार क्लब बाइ पाएर सोझै क्वाटरफाइनलमा स्थान बनाएका छन् । पहिलो खेलको विजेताले आर्मी र दोस्रो खेलको विजेताले न्यू स्टारसँग प्रतिस्पर्धा गर्नेछ ।

यसैगरी, चर्च ब्वाइज युनाइटेडले विराटनगर सिटी एफसीसँग र एनआरटीले सलहेश युवा क्लब सिरहासँग अन्तिम क्वाटरफाइनल खेलमा प्रतिस्पर्धा गर्नेछ । पुस १५ गते हुने फाइनल खेलको विजेताले १० लाख ५ सय ५५ रुपैयाँ प्राप्त गर्नेछ ।

२०६५ सालदेखि सञ्चालन भएको गोल्डकपको राशि यसपटक दोब्बर बनाइएको हो । गोल्डकपले २०७५ सम्म निरन्तरता पाएको थियो । छ वर्षपछि हुन लागेको गोल्डकपको १०औं संस्करणको विजेताले चार लाख ४४ हजार ४ सय ४४ रुपैयाँ पाएको थियो । यो संस्करण झापा ११ एफसीले जितेको थियो । आयोजक क्लबका अध्यक्ष दिपेन्द्र थापामगरका अनुसार प्रतियोगितामा ९० लाख रुपैयाँ खर्च हुने अनुमान गरिएको छ । प्रतियोगिताको सर्वोकृष्ट खेलाडीले १ थान इभी स्कुटर प्राप्त गर्नेछन् ।

प्रत्येक खेलमा प्लेयर अफ दि म्याच हुने खेलाडीले १० हजार रुपैयाँ, सर्वाधिक गोलकर्ताले १५ हजार रुपैयाँ पाउनेछ । यसैगरी, उत्कृष्ट रक्षक, प्रशिक्षक, फरवार्ड, मिडफिल्डर, गोलरक्षक र उदयीमान खेलाडीले समान १० हजार रुपैयाँ गर्नेछन् ।

# नेकपामा "ड्रेसकोड", आफ्नै गार्मेन्टमा सिलाइ



काठमाडौं । नेत्रविक्रम चन्द (विप्लव) नेतृत्वको नेकपाले नेताहरुमा 'ड्रेसकोड' लागू गरेको छ । एको मंसिर २७ गतेदेखि कपिलबस्तुको शिवगढीमा जारी पार्टीको केन्द्रीय समिति बैठकमा महासचिव विप्लवसहितका नेताहरु कालो रंगको कोट, पाइन्ट र सेतो सर्ट (एकै प्रकारको ड्रेस) लगाएर सहभागी भएका छन्।

केन्द्रीय कार्यालयमा बसिरहेको ९ औं केन्द्रीय समितिको छैठौं पूर्ण बैठकमा महासचिव विप्लव सीले 'साम्राज्यवाद र दलाल पुँजीवादकाविरुद्द दृढतापूर्वक मोर्चा खडा गरौ । समाजवादको नेतृत्वका लागि पार्टीलाई तयार पारौँ' भन्ने शीर्षकमा १७ पेज लामो राजनीतिक प्रतिवेदन प्रस्तुत गरेका छन्।

नेकपाका एक अनुसार नेताहरुले लगाएको पोशाक शिवगढीमा पार्टीले नै सञ्चालन गर्दै आएको गार्मेन्टका उत्पादन गरिएको हो । नेकपाले केन्द्रीय कार्यालय मातहत रहनेगरि जनकम्युन सञ्चालन गरेको छ। उक्त गार्मेन्टमा सर्ट, पाइन्ट, कोट, ज्याकेट, ट्राउजर, ट्र्याक सुट, स्कुल युनिफर्म लगायतका पोशाक सिलाइन्छ।

नेकपाले विभिन्न जिल्लामा सिजनअनुसारका कृषि उत्पादन गर्दै आएको छ। कफिवस्तु, मोरङ, चितवन, रुपन्देही, दाङ, बर्दिया लगायतका ठाउँमा पशुपालन, सिजनअनुसारका अन्न र नगदेबाली खेती गर्दै आएको नेकपाले जनाएको छ।

## सरकारको....

विषयमा कांग्रेसकै केही नेताहरुले विवाद खडा गरेर सरकार ढल्ने पो हो कि भन्ने आशय प्रकट भयो । जसको जवाफमा नेकपा एमाले अध्यक्ष एवं प्रधानमन्त्री ओलीले सरकार अबको १८ महिनामा परिवर्तन हुने आश्वस्त पार्दै विभिन्न स्थानको कार्यक्रममा स्पष्टिकरण दिंदैछन् ।

तर, ओलीको भविष्यवाणी मिलेन । अपर्झट बनेको देउवा नेतृत्वको सरकारले आफ्नो कार्यकाल पूरा गर्‍यो । शान्तिपूर्णरूपमा आमनिर्वाचन सम्पन्न गराएर मात्र देउवाले राजीनामा दिए । त्यो बीचमा सरकार बाहिरका दलले सरकार ढाल्छौं भनेर कतिपटक भने त्यसको गिन्ती नै छैन ।

एक हप्तामा सरकार ढाल्ने धम्की माओवादीले पनि दिएको थियो-२०६६ सालमा । रूक्माङ्गत कटवाल प्रकरणमा तत्कालीन प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले राजीनामा दिएपछि सडकमा आएको माओवादीले माधव नेपाल नेतृत्वको सरकारलाई एक हप्तामा ढाल्ने चेतावनी दिएको थियो ।

सरकार अहिल्लै ढल्छ, केही हप्तामा ढल्छ, क्रिसमस अघि नै ढल्छ, अंग्रेजी नयाँ वर्षमा ढल्छ भनिँदै आएकोमा अहिले फेरि त्यस्तै भाष्य राजनीतिक बजारमा गुञ्जिइरहेको छ ।

आइतबार चितवनका पत्रकारले सोध्नुअघि नै गृहमन्त्री रमेश लेखकले जवाफमा भने- 'म जहाँ पनि जान्छु, एउटा जिज्ञासा राखिरहेको पाउँछु । तपाईंहरूलाई पनि त्यही जिज्ञासा होला सरकार फेरबदल हुन्छ ?'

कांग्रेस-एमाले सत्ता गठबन्धनका एकजना सूत्राधार लेखकले जवाफमा भने- 'कांग्रेस-एमालेबीचको सम्बन्ध सौहार्द छ । सहमति अनुसार नै ०८४ सम्म जान्छ । सरकार फेरबदल या मन्त्री फेरिने कुरा निरर्थक हुन् । जनतामा अस्थिरताको सन्देश दिन यो भइराखेको छ ।' सरकार गठन भएको एक महिना नपुग्दै विपक्षी दलका नेता पुष्पकमल दाहाल 'प्रचण्ड'ले साउन २२ गते विराटनगर पुगेर ओली सरकार धेरै लामो नजाने भविष्यवाणी गर्दिए । पछि उनले दशैंपछि (२०८१ असोज)मा सरकार ढल्ने समेत दाबी गरे ।

'वेटिङ प्राइमिनिस्टर' (प्रमुख प्रतिपक्षी दलको नेता)ले सरकारबारे अनेक खालका टिप्पणी गरेपछि प्रधानमन्त्री ओलीले प्रहरीदेखि कर्मचारीको कार्यक्रममा पुगेर सरकार नढल्ने स्पष्टीकरण दिनुपर्‍यो । सरकार ढल्ने अफबाह फैलिँदा कर्मचारीले काम नगर्ने भय हुने भएकाले प्रधानमन्त्रीले पटक-पटक स्पष्टीकरण दिनुपर्ने अवस्था आयो ।

'अहिले दिनै सरकार परिवर्तनको हल्ला सुनिन्छ । दशैंपछि तुरुन्त परिवर्तन हुन्छ रे, कुन दशैं भनेको हो ? ०८४ सालको दशैंपछिको चुनावमा ? ठीकै हो । त्यसभन्दा यता म १ वर्ष ९ महिना रहन्छु । त्यसपछि शेरबहादुरजीलाई हस्तान्तरण गर्छु । मैले पहिला नै भनेको छु । आफैं फेरिन्छ यो सरकार । त्यसपछि शेरबहादुरजीले नेतृत्व गर्नुहुन्छ । चुनाव उहाँको नेतृत्वमा हुन्छ,' प्रधानमन्त्रीले प्रहरी प्रशासनलाई आश्वस्त पार्दै भनेका थिए ।

ओली यत्तिमै रोकिएनन्, कात्तिक ७ गते सरकारको सय दिनको उपलब्धि सार्वजनिक गर्ने बेलामा पनि ओलीले दोहोर्‍याए- 'सरकार ढाल्ने कुरा दिवासपना हो ।' 'सरकार अहिले ढल्छ, भरे ढल्छ, भोलि बिहानै ढल्छ भन्नेजस्ता अफवाह पनि फैलाउने गरिएको छ । यो काम गर्न नदिने उद्देश्यले चलाइएको हल्ला हो । कांग्रेस र एमालेजस्ता इतिहास र हैसियत भएका तथा अन्य दलहरू मिलेर बनेको सरकार ढल्ने दिवासपना कसैले नदेखे हुन्छ,' ओलीले सय दिनको उपलब्धि सार्वजनिक गर्न सिंहदरबारमा आयोजित कार्यक्रममा भनेका थिए ।

मंसिर २० गते चीनबाट फर्केपछि पनि ओलीले त्यही सन्देश दिनुपर्‍यो, 'मेरो कार्यकाल अब १८ महिना मात्र हो, २०८३ असार पछि शेरबहादुर देउवा प्रधानमन्त्री बन्नुहुन्छ ।'

सरकार ढल्ने विश्लेषण गरेकाहरू र ढल्छ भनेर प्रतीक्षा गरेकाहरूलाई खासै शुभ संकेत छैन । धेरैको आशंका थियो- 'ओलीले चीनमा बीआरआई ऋण सम्झौता गर्छन् र त्यसको असरले सरकार ढल्छ ।' ओलीको चीन भ्रमणका बेला बीआरआई फ्रेमवर्क सम्झौतामा हस्ताक्षर भयो, तर ऋण लिने सम्झौता नभई कांग्रेसले तयार गरेको ड्राफ्टमा । विमानस्थलमा आर्लेलगत्तै ओलीले प्रस्ट्याए- 'हामी ऋण लिन गएका थिएनौं, तर पनि किन त्यही ऋण भनेर सारंगी रेटिएको छ मैले बुझ्न सकेको छैन ।'

ओलीले चीनमा गरेको सम्झौता कांग्रेस सभापति देउवाले गठबन्धनमा अनुमोदन मात्र गरेनन्, ऋण नलिने सम्झौता गरेको भन्दै ओलीलाई बधाई समेत दिए । मंसिर २१ गते विराटनगर विमानस्थलमा देउवाले भने- 'प्रधानमन्त्रीज्यूलाई बधाई छ । ऋण लिएको छैन भनेपछि बुझ्नुस्, ऋण लिएकै छैन ।'

ओली सरकारप्रति देउवाको समर्थन एमालेकै नेताको भन्दा जब्बर छ । सरकारको सय दिनको कामलाई लिएर एमालेकै नेताभन्दा पहिला देउवाले भन्दिए- 'सरकारको कामबाट कांग्रेस सन्तुष्ट छ, राम्रो काम भएको छ ।' एमालेसँग असार १७ गते भएको ७ बुँदे सहमतिप्रति कांग्रेस र त्यसमा पनि देउवा प्रतिबद्ध छन् । साउन ६ गते प्रतिनिधि सभामा विश्वासको मत दिने क्रममा भनेको कुरा देउवाले दोहोर्‍याइरहेका छन्, त्यो हो- '७ बुँदे सहमतिप्रति कांग्रेस प्रतिबद्ध छ, एमाले इमान्दार होस् ।'

देउवा र ओली एक ठाउँमा हुँदासम्म (जुन अहिलेसम्म छन्) अरू आन्तरिक या बाह्य कारणले सरकार ढल्ने सम्भावना क्षीण छ । सरकारको नेतृत्व लिनुस् भनेर बूढानीलकण्ठ धाउनेलाई देउवाले भनेका छन्- 'पर्खनुस्, १८ महिनापछि । अर्थात्, एमालेसँग भएको सहमतिअनुसार २०८३ असारपछि । ओलीले सरकारको नेतृत्व गरेदेखि नै निश्चित अवधिपछि देउवालाई हस्तान्तरण गर्ने बताउँदै आएका छन् ।

कांग्रेस महामन्त्री गगन थापाले सरकारको नेतृत्व लिइदिनुस् भनेर प्रचण्डले हप्तामा एकपटक खबर पठाउने गरेको भनेर मंसिर १३ गते कीर्तिपुरमा भाषण गरेका थिए । कांग्रेसका लागि 'राजनीतिक विश्वसनीयता' ठूलो कुरा भएको भन्दै देउवाले सरकारको नेतृत्व गर्ने प्रस्ताव लिएर आउनेलाई थर्काएर पठाउने गरेको कांग्रेस नेताहरू बताउँछन् । असार १७ मा कांग्रेस-एमालेबीच गठबन्धन बन्दा यसलाई 'अन्तिम विकल्प'को सरकार भनिएको थियो । संसद्को पहिलो र दोस्रो दल मिलेर सरकार बनाउने जोखिमपूर्ण अभ्यास थाल्नुअघि कांग्रेस र एमालेबीच धेरै चरणको छलफल भएको थियो ।

'अन्तिम विकल्प' असफल भयो भने परिस्थिति सम्हालिनसक्नु हुन्छ भन्नेमा दुई दलका शीर्ष नेता र सूत्राधार हरूले विमर्श गरेका थिए । '३२ सिटे' दलले संसदका पहिलो र दोस्रो दललाई हल्लाउने परिस्थिति, कहिले कांग्रेस र कहिले एमालेसँग मिलेर एकअर्काविरुद्ध खेलेको निष्कर्षसहित उनीहरू मिल्ने अवस्था सिर्जना भएको थियो ।

कांग्रेस-एमाले मिल्ने परिस्थिति घरेलु आवश्यकताले निम्त्याएको थियो, न कि प्रचण्डले दाबी गरेजस्तो समुद्रपारिबाट सरकार ढालिएको हो । जुन परिस्थिति र आवश्यकताले कांग्रेस-एमालेले सरकार बनाएका थिए, त्यसमा कुनै बदलाव आएको छैन । बरु प्रचण्डको बोलीमा काफी बदलाव आएको छ- 'बेचन झा पक्राउ भएकाले सरकार ढलेको, गिरिबन्धुको फाइल खुल्न थालेपछि सरकार ढलेको, बंगलादेशमा हसिनालाई हटाउने शक्तिले सरकार ढालेको आदि ।'

देउवा र ओली एकठाउँमा हुँदासम्म अरू आन्तरिक या बाह्य कारणले सरकार ढल्ने सम्भावना क्षीण छ । सरकार गठन/विघटनको मुख्य फ्याक्टर आन्तरिक नै हो, बाह्य भन्ने जुन हौवा छ, त्यो सहायक मात्र हो । उत्पात राम्रो काम गरेर होइन, ओली र देउवाको स्वार्थ मिलेका कारण गठबन्धनलाई सर्दी लाग्ने सम्भावना तत्काल देखिन्न ।

## भक्तपुर....

असम्भव छ । तर, भक्तपुरबारे एकैपटक जान्न बुझ्न सकिनेगरी महोत्सव डिजाइन गरिएकाले महोत्सव छुटाउनेले भक्तपुर बुझ्ने अवसर छुटाउने महोत्सव सचिवालय संयोजक गौतम लासिवा बताउँछन् । पाँच दिने भक्तपुर महोत्सव दरबार क्षेत्रमा एक कार्यक्रम गर्दै महोत्सव समापन गरिएको घोषणा गरिएको हो ।

महोत्सवको क्रममा सामान्य दिनहरूमा दैनिक एक लाख र शनिबार अनि आइतबार सार्वजनिक बिदाको दुई दिन अनि अन्तिम दिन दुई दुई लाख आन्तरिक तथा बाह्य पर्यटकहरू महोत्सव हेर्न आएको अनुमान छ । भक्तपुर महोत्सव सकिएसँगै जिल्लाकै अर्को नगरपालिका मध्यपुर थिमिमा पुस १२ गतेबाट मध्यपुर महोत्सव शुरु हुँदैछ । पूर्व घोषित तालिका अनुसार पुस १२, १३ र १४ गते गरी तीनदिने मध्यपुर महोत्सव हुने भएको हो ।

पर्यटन विकासका लागि मध्यपुर महोत्सव २०८१ ले गति लिने आयोजक मध्यपुर थिमि नगरपालिकाले जनाएको छ । महोत्सव मुख्य गरी थिमि शंखधरचोकदेखि नगदेश र बोदे हुँदै तिगनीको नीलबाराही स्थानसम्मका ऐतिहासिक बस्ती क्षेत्रलाई प्रदर्शनी स्थलको रूपमा प्रस्तुत गरिने जनाइएको छ । यसरी यो महोत्सव करिब ५.५ किलोमिटर लामो क्षेत्रमा सञ्चालन हुने जनाइएको छ ।

भक्तपुर, चाँगुनारायण, धुलिखेल, जिरीजस्ता लोकप्रिय पर्यटकीय गन्तव्यहरूको स्वागतद्वारको रुपमा रहेको काठमाडौं उपत्यकाको केन्द्र भागमा अवस्थित मध्यपुर थिमि नगरपालिका पुरातात्त्विक एवम् सांस्कृतिक सम्पदाले सुसम्पन्न भएको र यही कारण आन्तरिक तथा बाह्य पर्यटकलाई मध्यपुर थिमि नगर भित्राउन महोत्सव गर्न लागेको मध्यपुर थिमि नगरपालिकाका प्रमुख सुरेन्द्र श्रेष्ठले बताए ।

मध्यपुरलाई पर्यटकीय गन्तव्यको रूपमा विकास गर्न पहिलो पटक बि.सं. २०५५, दोस्रो पटक २०५८ र तेस्रो पटक २०६१ मा मध्यपुर महोत्सव आयोजना गरिएको थियो । यो चौथो पटकको महोत्सव हो ।

## २१ औं....

नेवारी परम्परागत बाजा, धुन्याँ तथा झाँकीका साथ अगाडि बढेको र्‍याली नगर परिक्रमापछि वसन्तपुरमा पुगेर औपचारिक कार्यक्रममा परिणत भएको थियो । कार्यक्रम ज्यापु संस्कृति विकास कोषको आयोजनामा भएको हो ।

कार्यक्रम प्रधानमन्त्री केपी शर्मा ओलीको आतिथ्यतामा सम्पन्न भएको थियो । कार्यक्रममा उपप्रधानमन्त्री एवं सहरी विकासमन्त्री प्रकाशमान सिंहले परिश्रम गर्नेलाई कदर गर्न जान्नुपर्ने बताउनुभयो ।

उहाँले समाजमा परिश्रम गर्नेहरुलाई हेर्ने दृष्टिकोणमा परिवजर्तन जरुरी रहेको बताउनुभयो । किसानलाई समाजमा सम्मान र कदर गर्न सक्नुपर्ने उहाँको भनाइ छ ।

कार्यक्रममा काठमाडौं महानगरपालिकाकी उपप्रमुख सुनीता डंगोलले नेवार समुदायभित्र पनि विभिन्न समुदायका पर्वहरुको आ-आफ्नै महत्व रहेको बताउनुभयो ।

उनले देशलाई आर्थिक रूपमा सम्पन्न बनाउन र देशको संस्कृतिको जगेर्ना गर्न जुटेर अघि बढ्नुपर्ने बताइन् ।

ज्यापू समूदायको संस्कृतिको संरक्षण र सम्वर्द्धन गर्ने उद्देश्यका साथ विसं २०६१ सालदेखि यःमरी पुन्ही सँगसँगै उपत्यका लगायत देशभरका ज्यापू समुदायहरुले राष्ट्रिय ज्यापू दिवसलाई पर्वकै रुपमा मनाउँदै आएको छ ।

नेपाल भाषामा "ज्या" भनेको काम र "पू" भनेको बीउ हो । निरन्तर खेती किसानीमा संलग्न हुने मिहिनेती र पौरखको रीत र परम्परा नै ज्यापू संस्कृति हो ।

नेवारी समूदायको समेत मूल संस्कृतिको रुपमा रहेको यसको संरक्षणका लागि सरकारले ज्यापू दिवसलाई राष्ट्रिय दिवसको मान्यता समेत दिएको छ ।

विक्रम संवत् २०६१ सालमा तत्कालीन प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला नेतृत्वको सरकारले यसलाई राष्ट्रिय दिवसको मान्यता दिएको हो ।

## कहिले .

भन्दियो भने त्यो कागको पछाडि दौडिएर आफु 'खाल्डो'मा पर्दासम्म कान समाउँदैनन् ।

सायद उनीहरुलाई थाहा नहुन सक्छ ! नेपालमा २ महिना अघि कुनै सरकार बनेको छैन । वर्तमान नेपाल सरकार बनेको मंसिर ३० गतेबाट ठ्याक्कै ६ मिहना पूरा भयो । नेपाली कांग्रेसको समर्थनमा एमालेका अध्यक्ष ओली गत असार ३० गते प्रधानमन्त्रीमा नियुक्त भएका थिए । र, निरन्तर सरकारको प्रधानमन्त्रीकै रुपमा छन् ।

अब सोच्नुस्, ती बिष्टको भनाई अनुसार २ महिना अघि मात्रै बनेको र महिना दिन भित्रै ढल्नेवाला नेपाल सरकार कुन हो ?

हुनसक्छ बिष्टले अन्तरवार्ताका क्रममा वर्तमान नेपाल सरकार कहिले बनेको थियो ? त्यो मिती बिर्सिएका हुन् । अनि यो पनि हुनसक्छ, ओली नेतृत्वको सरकार महिना भित्रै ढल्दैछ । जे सुकै होस् । आम सर्वसाधरण नेपालीहरुका निम्ती भने यो खबर 'कागलाई बेल पाक्यो, हर्ष न विस्मात' भने जस्तै हो ।

यद्यपी, यस्तो भन्दै गर्दा देश र जनताले राजनीतिक स्थिरता खोजिरहेका छन् । त्यसको जगमा दिगो बिकास खोजेका छन् । धार्मिक, ऐतिहासिक र प्राकृतिक विविधताले विश्वकै नमुना देशको समुन्नत सम्बृद्धि खोजेका छन् । शान्ति अनि सुशासनको सुनिश्चितता खोजेका छन् । राष्ट्रप्रेमी, देशभक्ति र स्वाभिमानी 'भिजनरी' नेतृत्व खोजेका छन् । जनताप्रति जिम्मेवार, उत्तरदायी, जवाफदेही र पारदर्शी 'सरकार' खोजेका छन् ।

तर, नेपालीहरुका यि चाहाना 'आकाशको फल आँखा तरी मर' भनेजस्तै भएको छ । जनजिब्रोमा आउने गर्छ, 'एउटा राजा हटाएर सयौं राजा ल्यायौं ।' आज नियाल्ने हो भने नेपाल र नेपालीका ऐतिहासिक, परम्परागत मुल्य-मान्यता, धर्म-संस्कृती, धराशायी बनाइँदैछ । देशको नक्सामा समेटिएको भूभागमा बस्ने नेपालीले खुलेर म नेपाली हुँ भन्न सक्ने अवस्था छैन । विज्ञान र नयाँ सम्यतासँगै आएका प्रविधीको दासत्व प्रवृत्तिका कारण समाजमा विकृत्रि, विसंगति सँगै नयाँ थुप्रै चुनौतीहरु देखा परेका छन् । पुराना पुस्ता सरकारको कार्यशैली देखेर वाक्कदिक्क छन् । नयाँ पुस्तालाई भरोसा नै छैन । राज्य, सत्ता र नेतृत्वप्रत्ति वितृष्णा बढ्दो छ । अन्याय, अत्याचार, भ्रष्ट्राचारको जालो मौलाउँदै छ ।

समाज, देश, सत्ता र सरकारको नेतृत्व गर्नेहरु विधी, पद्धति, नियम, कानुन र मार्यादाको उल्लंघन गर्दै हिँडिरहेका छन् । जसका कारण 'सानालाई ऐन, ठूलालाई चैन' भन्ने भाष्य स्थापित हुँदैछ । सर्वसाधरणले समान अधिकारको प्रत्याभुति गर्न पाएका छैनन् । जताततै नातावाद, कृपावाद र चाकडीप्रथाले नराम्रोसँग जरा गाडेको छ । अनुत्पादक क्षेत्रमा देशको लगानी बढि छ । टुक्रे योजनाले प्राथमिकता पाउँदैछ । सामाजिक हितका निम्ती हैन्, सत्ताको नेतृत्व र तीनका आसेपासेका स्वार्थसिद्धिका लागि योजना विनियोजन गरिन्छ । त्यसको उचित कार्वान्वयन हुँदैन । बिकासे योजनामा गुणस्तरीयता भन्दा बढि कमिसनको हिसावकिताब चेकजाँच गरिन्छ ।

एकातर्फ, देशमा स्वदेशी तथा विदेशी लगानी ल्याउने तर्फ सरकारको ध्यान छैन । देशमा भएका उद्योग, कलकारखानाले नियमित पारदर्शी हिसावले राजश्व बुझाउँदैनन् । उपयोग गरेको बिजुली तथा पानीको महशुल तिर्दैनन् । कम्पनी घाटामा देखाउँदै अकुत सम्पती थुपारिरहेका छन् ।

अर्कोतर्फ, नव उद्यमीहरुका निम्ती सरकारले सुरक्षाको ग्यारेन्टी दिन सकेको छैन । सोझासाझा जनताले जेनतेन गरेर चलाउन सुरु गरेका कम्पनी र उद्योग कलकारखानाहरु राज्यको चर्को कर असुली धन्दाका कारण खण्डहर बन्दैछन् । सरकारले लगानीको ग्यारेन्टी दिने कुनै कार्यक्रम ल्याउँदैन् । अनुदान, सहुलियत पूर्ण कर्जा सामान्य नागरिकले पाउँदैनन् ।

अझैपनि कतिपय जनताले उचित गुणस्तरीय उपचार हैन्, सिटामोल मात्रै नपाएर ज्यान गुमाउनु पर्ने बाध्यता कायम नै छ । नेताको उपचारका निम्ती भने सरकारले करोडौं रकम खर्च गर्छ । हिजो जनताको जनजीवन फेर्ने सपना देखाएर चप्पल पट्काउँदै सत्तामा पुगेकाहरुको जीवनशैली आज लोभलाग्दो छ । गुणस्तरीय आधारभुत आवश्यकता हरेक नागरिकको पहुँचमा कागजमा मात्रै सिमित हुन पुगेको छ । कानुन छ, कार्वान्वयन छैन । कार्वान्वयन हुन्छ, समानता हुन्न । समग्रमा भन्नुपर्दा देशको हालत सम्हाल्नै नसक्ने गरि बिग्रिँदैछ । यसतर्फ समयमै ध्यान पुर्‍याउन नसके राष्ट्रकवि लक्ष्मीप्रसाद देवकोटाले कवितामा 'नेपाली हामी रहौंला कहाँ नेपालै नरहे' भने जस्तै नहोला भन्न सकिन्न !

अहिलेसम्म आलोपालो प्रधानमन्त्री, मन्त्री बनेकाहरुलाई देशको यो कान्तिविजोक हुँदा मनमा के लाग्छ ? त्यो मलाई थाहा छैन् ।

तर, मलाई यत्ति थाहा छ । थुप्रै निर्मला पन्तहरुले न्याय पाउन सकेका छैनन् । तुइन तरिरहँदा नदीमा बेपत्ता भएका दार्चुलाका जयसिंह धामीहरु अझै भेटिएका छैनन् । नारायणहिटी, मदन भण्डारी जस्ता हत्याकाण्ड 'रहस्यको गर्भ' मै छ । देशको अर्थतन्त्र रेमिट्यान्सले नै धानिरहँदा पनि विपिन जोशीहरुका अवस्था बेखबर छन् । अन्ततः अर्काको देशमा आफ्नो रगत, पसिना अनि स्वाभिमान वेचेर धन अनि खुसी किन्न परदेश गएकाहरु 'कफनमा' फर्किन बाध्य छन् । उनीहरुका असह्य पीडा, रोदन, चित्कार अनि अन्तिम श्वास फेर्दा नेपालप्रतिको भावना सरकारले महसुश गर्न सकेको छैन ।

मलाई यो पनि थाहा छ । आफू व्यवसायका कारण आर्थिक रूपमा डुबेका र त्यसका लागि सरकारी नीतिहरू दोषी रहेको भन्दै संसद भवन अगाडी आफैँलाई आगो लगाएर जलाएका प्रेम आचार्यहरुको गुनासो बुझ्न सकेको छैन । न त देशमा आफ्नो भविष्य नदेखेर जतिसक्दो छिटो स्वदेश छाड्न पाउँ भन्दै बालकुमारीमा प्रदर्शन गर्दागर्दै सरकारी गोली खाएर मृत्युवरण गरेका अछामका वीरेन्द्र शाह र दैलेखका सुजन रावतहरुको मनोकांक्षा सुन्न सकेको छैन ।

यति लेख्दै गर्दा त्यसोभए देशमा बिकास नै भएको छैन त ? भन्ने प्रश्न उब्जिन सक्छ । हो, बिकास भएको छ । तर, त्यति मात्रै जति समयमापन विकासक्रम अनुसार न्युनतम नभई नहुने थियो ।

समयसँगै देशमा थुप्रै राजनीतिक परिवर्तन भए । तन्त्र फेरियो । दल फेरिए । नेता फेरिए । सरकार ढल्यो । नयाँ सरकार बन्यो । प्रत्रानमन्त्री फेरिए । मन्त्री फेरिए । तर, के देशमा कति तीनै राजनीतिक दलले देशमा 'तन्त्र' फेर्ने बेला देखाएका सपना जस्तै मुलुकको अबस्था फेरियो त ? चुनावअघि जनतासँग प्रतिबद्धता गरेजस्तै जितेपछि पटकपटक मन्त्री प्रधानमन्त्री अनि जनप्रतिनिधी बनेकाहरुले भनेजस्तै नयाँ व्यवस्थामा जनताको अबस्था फेरियो त ?

हो मलाई थाहा छ, यो देशमा पटकपटक सरकार ढल्यो, ढालियो । अनि, फेरियो । तर, त्यो ढालेको व्यवस्था, ढालिएको सरकार अनि फेरिएका नेतृत्वले राष्ट्र, राष्ट्रियता सँगै आम नेपालीहरुका निम्ती के गरे ?

सत्य, तथ्य अनि निष्पक्ष भएर सायदै यसको जवाफ कसैले दिन सक्ला !

तर, मलाई लाग्छ । यसको जवाफ हरेक नेपाली नागरिकले माग्नुपर्छ । देशको यो दुरावस्थामा हुँदासम्मको नैतिक जिम्मेवारी सबैले लिनुपर्छ । किनकी, प्रश्न गर्नेले उत्तर पनि दिन सक्नुपर्छ । फल प्राप्तीको चाहाना राख्नेले पसिना बगाउन सक्नुपर्छ । राष्ट्रले मलाई के दियो भनेर सोध्नेले देशका निम्ती मैले यो दिएँ भन्न सक्नुपर्छ । फलानो फलानोका कारण देश बिग्रियो भनेर गाली गर्नेले राष्ट्रहितका निम्ती योगदान गर्न तयार हुनुपर्छ ।

अब आम नेपालीलाई के गुम्यो ? के बिग्रियो भनेर आरोपप्रत्यारोप मात्रै गरेर बस्ने छुट छैन । देशको दुरावस्थाका कारण निराश बनेर नेतालाई गाली गर्दैमा भाविपुस्ताको 'सराप' बाट उन्मुक्ति पाइँदैन् ।

त्यसैले अब समस्त नेपालीले व्यबस्थालाई दोष दिन छाड्नुपर्छ । नेतालाई गाली गरेरै खुसी भइराख्ने प्रवृत्ति त्याग्नुपर्छ । वितृष्ण र नकरात्मक दृष्टिकोणलाई तिलान्जली दिनुपर्छ । सँगै सुरु गर्नुपर्नेछ, सम्बृद्ध राष्ट्र बनाउने अभियान ! जनताप्रति उत्तरदायी, जिम्मेवार, पारदर्शी, जवाफदेही, दुरदर्शी, भिजनरी, परिपक्क, राष्ट्रप्रेमी नेतृत्व बनाउने अभियान !

सायद, त्यसपछि बन्नेछ । आम नेपाली 'जनताको सरकार, नेपाल सरकार' ।

जय देश ! जय नेपाल !

वर्ष १८ अङ्क २० २०८१ पुस ०३ गते बुधबार
18 Dec. 2024 Wednesday
इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# चलचित्र "कर्मा"को छायांकन सुरु



काठमाडौं । सौरभ चौधरीको निर्देशनमा तयार हुन लागेको चलचित्र 'कर्मा'को शुभ-मुहुर्तसँगै छायांकन पारम्भ गरिएको छ । निर्देशक चौधरीले आफ्नो आगामी एक्सन चलचित्रको छायांकन शुक्रबारदेखि दाङको घोराहीबाट सुरु गरेका हुन् । ४० दिन दाङ र ६ दिन रुकुममा छायांकन हुने सिनेमाको मुख्य भूमिका निभाइरहेका कलाकार विपिन कार्की, उपासना सिंह ठकुरी, मुकुन भुसाल र दिव्यदेवको सहभागीतामा शुभ-मुहुर्तसँगै छायांकन पारम्भ गरिएको हो ।

यो अभिनेत्री चलचित्रमा उपासना अभिनेता कार्कीको जोडीको रूपमा देखिने छिन् भने मुकुन नेगेटिभ क्यारेक्टरमा देखिने भएका छन् । विपिन र उपासनाले पहिलो पटक चलचित्रमा सहकार्य गर्न लागेका हुन् ।

एक्सन ड्रामा जनरामा निर्माण हुने यस चलचित्रको कथा निर्देशक चौधरी स्वयंले लेखेका छन् । निर्देशक चौधरीका अनुसार यो चलचित्रमा अभिनेता विपीनलाई पहिलोपटक एक्सन अवतारमा देख्न पाइनेछ ।

यसअघि निर्देशक चौधरीले यसअघि 'अगस्त्य: च्याप्टर १'को निर्देशन गरेका थिए । 'कर्मा' उनको तेस्रो निर्देशकीय फिचर सिनेमा हो । निर्देशक चौधरीलाई ' अगस्त्य: च्याप्टर-१'बाट दर्शकहरू र समीक्षकहरूको राम्रो प्रतिक्रिया प्राप्त भएको थियो, जसले गर्दा 'कर्मा'प्रति पनि उच्च अपेक्षा गरिएको छ । आर्टिस्टिक इनटरटेनमेन्टको प्रस्तुति रहने ' कर्मा'मा बसन्त लम्सालको लगानी रहनेछ ।

छायाकंन सुरु हुनु अगावै अन्तर्राष्ट्रिय प्रदर्शन अधिकार बिक्री गर्न सफल भएको 'कर्मा' नयाँ वर्षको छेको पारेर आगामी चैत्रको २९ गते प्रदर्शनमा आउने घोषणा गरिएको छ ।

# भूषण र शान्ति श्रीको "माया बराबर" बजारमा



काठमाडौं । भूषण खतिवडा र शान्ति श्री परियारको आवाजमा नयाँ गीत 'माया बराबर' सार्वजनिक गरिएको छ । फिन्जु पाखिनका प्रेमिल शब्दमा गायक भूषण खतिवडाकै सङ्गीत सुन्न सकिन्छ ।

'नेपमेलो' नामको युट् युब च्यानलमा सार्वजनिक गरिएको गीतको भिडियोलाई पनि उतिकै प्रेमिल प्रस्तुतिका साथ तयार गरिएको छ । सार्वजनिक भिडियोमा रियल जोडी लक्ष्मी बर्देवा र जीवन भट्टराईको सफल प्रेम यात्रालाई मनोरञ्जनात्मक शैलीमा प्रस्तुत गरिएको छ ।

उत्सव दाहालको छायाङ्कनमा तयार भिडियोमा लक्ष्मी र जीवनसँगै सागर दाहाल, विशाल पहारीको अभिनय रहेको छ । सार्वजनिक गीतमा हेमन्त कान्छा रसाइलीको सारङ्गी, रत्न विकेको बाँसुरी, सञ्जीव बराइलीको गितार तथा श्यामस्वेत रसाइलीको मिक्सिङ मास्टरिङ रहेको छ । यस 'माया बराबर' गीतको भिडियोलाई कलाकार द्वय लक्ष्मी र जीवनले नै निर्देशन गरेका हुन् ।

# ज्याकी च्यान अभिनित "कराँते किड" नयाँ श्रृंखलाको ट्रेलर सार्वजनिक



काठमाडौं । हलिउड स्टुडियो सोनीले विश्वचर्चित मार्सल आर्ट्सको कलामा आधारित फिल्म श्रृंखला 'कराँते किड : लिजेन्ड्स' सार्वजनिक गरेको छ। ज्याकी च्यान स्टारर यो एक्सनप्रधान फिल्म ३० मे, २०२५ मा रिलिज हुनेछ ।

यस फिल्ममा दुई सिद्धहस्त कलाकार च्यान र राल्फ म्याचियो एकसाथ छन् । फिल्ममा म्याचियोले ड्यानिल लारुसो र च्यानल मिस्टर हानको भूमिका निर्वाह गरेका छन् । अमेरिकामा जन्मिएका चिनियाँ स्टार बेन वाङले लि फोङ नामक नयाँ विद्यार्थीको भूमिका निर्वाह गरेका छन् ।

च्यान र म्याचियोले विश्वब्यापी अडिसन आयोजना गरेपछि वाङलाई फिल्ममा कास्ट गरेका थिए । नेपालमा समेत ज्याकी च्यानका प्रशंसक धेरै छन् । २०७२ सालको भूकम्पको क्रममा राहत वितरणका लागि अभिनेता ज्यान युनिसेफमार्फत नेपालमा समेत आएका थिए ।















प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक

वर्ष १८ अङ्क २१ ने.सं. ११४५ थिंलागा दशमी पुस १० गते बुधबार, २०८१ 25 Dec. 2024 Wednesday पृष्ठ ८ मूल्य रु १०/–




# कांग्रेस–एमाले गठबन्धनको अन्तर्य



काठमाडौं । देशमा विगतदेखि नै सरकार गठनमा बहुपार्टीको अवधारणा कायम हुँदै आइरहेको छ । देशमा एकल पार्टीको सरकारसमेत दिगो हुन नसकेको यथार्थ कायम रहकों छ । यस्तोमा दुई वा दुई भन्दा बढी दलहरुको सरकारले दिगोपना पाउनेको त सायदै कल्पना गर्न सकिन्छ । यसैको अन्तर्य हो देशमा कुनै न कुनै दलहरुको सत्ता गठबन्धन बिना सरकार बन्न नसक्ने परम्परा नै बनी सकेको छ । यस्तैमा कांग्रेस-एमाले सत्ता बाँडफाँटका भित्री अन्तर्यहरू बाहिर ल्याउन नमिल्ने हुनाले बाहिर ल्याउन मिल्ने कुरा खोजी गर्दा संविधान संशोधन भेटिएको हो ।

'सौता-सौता मिले भने गफ गरेर, मिलेनन् भने झगडा गरेर समय कटाउँछन्' यो पुरानो भनाइ नेका-एमाले गठबन्धन सरकारका हकमा पूर्णतः लागू भएको देखिन्छ । हाल नेका-एमाले यसरी र यति गहिरो मिलापमा छन् कि उनीहरूको समय गफ गरेर बितिरहेको छ । यी दुवै दल नमिलेको अवस्थामा बाझेर समय व्यतीत गरेका थिए । नेका-एमाले मित्रता र गठबन्धनको वस्तुपरक आवश्यकता सन्दर्भमा बहस गर्ने सैद्धान्तिक आधार भेट्टाउन कठिन छ । यसमा सत्य के हो भने ओली र देउवालाई अचानक मिल्न मन लाग्यो मिले ।

एकले अर्कालाई फोन गरे, भेट्ने समय मिलाए, निर्धारित समयमा भेट भयो, 'लु हामी मिलेर सरकार बनाऊँ' भने, सरकार बन्यो । यही हो, नेका-एमाले वर्तमान गठबन्धन ।

जहाँ राजनीति हुन्छ, त्यहाँ केही न केही सिद्धान्तका सूत्र हुन्छन् नै । सिद्धान्तको लागि सातबुँदे समझदारीपत्र तयार पारियो । ओली-देउवाका वरिपरि सबै किसिमका सम्झौता मस्यौदा गर्न सक्ने 'क्षमतावान्' हरूको कुनै कमि छैन । उसै पनि २०६५ साल यता दलहरूबीच तमसुक लेखाइमै केन्द्रित छ ।

सहमति नामका यी तमसुकहरूका आधारमा सरकार फेरिएका छन् र प्रत्येक पटक दलमा लागेका केही केटाहरूले नयाँ मन्त्रीको शपथ गर्न पाएका छन् । संसारमै दलहरूबीच गठबन्धन गरिन्छ । गठबन्धन गर्नुअघि न्यूनतम साझा कार्यक्रम बनाइन्छ । गठबन्धनका दलहरूले सो साझा कार्यक्रमको अपनत्व ग्रहण गर्छन् । गठबन्धनले नीति प्रक्षेपणको रणनीतिक कार्ययोजना तयार पार्छ । चुनावपछि प्रस्तावित गठबन्धनले सरकार बनाएको अवस्थामा गर्ने कामहरूको सूची बन्छन् ।

तर, नेपालमा नेका-एमालेभित्र यति धेरै वैमनस्यता र आरोप प्रत्यारोपको शृंखला जारी रहेका बेला सरकारमा गरिने सहभागिताबाट प्रधानमन्त्री खड्गप्रसाद ओलीको समृद्धिको सपना सोम शर्माको सातुको कथामा गएर टुंगिनु अपरिहार्य छ । नेका-एमाले बीचका सैद्धान्तिक असहमतिलाई नजर अन्दाज गरेर बनाइएको गठबन्धन राज्य वा सरकारको चरित्र सुधारमा केन्द्रित हुन असम्भव लाग्छ । किनकि दुवै दलहरूमा समाजका प्रत्येक चुनौतीलाई पर्गेल्ने दृष्टिकोणमा ठूलो भिन्नता र व्यापक असमानता विद्यमान छ ।

ध्रुवसत्य के हो भने गठबन्धनहरू सिद्धान्तमा भन्दा अवसरवादमा विश्वास गर्दछन् । गठबन्धनको भित्री चाहना गठबन्धनको अर्को पक्षबाट आफ्नो हितमा काम गराउनु हो । ओलीबाट आफ्नो काम गराउने नेकाको चाहना र नेकाबाट आफ्नो हितार्थ काम गर

बाँकी पेज ७ मा

# कोप-१६ र कोप-२९ मा सहभागी आदिवासी अगुवाहरु बिच भनाभन



काठमाडौं । जैविक विविधता सम्बन्धी विश्व सम्मेलन कोप-१६ तथा जलवायु परिवर्तनसम्बन्धी संयुक्त राष्ट्रसंघीय महासन्धि (यूएनएफसीसीसी)का पक्ष राष्ट्रहरूको २९औँ सम्मेलन (कोप-२९) मा सहभागीहरूले त्यहाँ उपस्थित हुँदा बुझेका, देखेका अनुभवहरूको आदानप्रदान गरेका छन् । नेपाल आदिवासी जनजाति महासंघ (नेफिन) र आदिवासी जनजाति महिला मञ्च (निफ)ले यसैसाता राजधानीमा अन्तरक्रिया कार्यक्रमको आयोजना गरी कोप-१६ र कोप-२९ मा नेपालबाट सहभागी भएका विशेषगरी आदिवासी जनजाति मुद्दामा काम गर्ने सहभागीहरूले अनुभव आदानप्रदान गरेका हुन् ।

त्यस अवसरमा जैविक विविधता र जलवायु परिवर्तन तथा आदिवासी जनजातिको अधिकारका विषय अत्यन्त महत्वपुर्ण भएपनि यसका विषयमा नेतृत्व तह मै राम्रोसँग जानकार हुन नसकेको सहभागीहरूले बताएका छन । आफूले सिकेका ज्ञानहरू अरूलाई पनि जानकारी दिनुपर्ने भन्दै

बाँकी पेज ७ मा

# थाइल्याण्ड, कम्बोडियालगायत देशमा जाँदा सावधानी अपनाउन सरकारको आग्रह !



काठमाडौं । सरकारले म्यान्मार, थाइल्याण्ड, कम्बोडिया, लाओसलगायत मुलुकहरूमा जान चाहने वा जाने तयारीमा रहेका नेपाली नागरिकलाई तीनबुँदे यात्रासम्बन्धी सूचना (ट्राभल एड्भाइजरी) सार्वजनिक गरेको छ । परराष्ट्र मन्त्रालयले सोमबार ट्राभल एड्भाइजरी जारी गर्दै नेपाली नागरिकलाई सावधानी अपनाउन आग्रह गरेको हो ।

आकर्षक तलब र

बाँकी पेज ५ मा

# मध्यपुर महोत्सव–२०८१ को तयारी बारे जानकारी




भक्तपुर । मध्यपुर थिमि नगरपालिकाले यही पुस १२, १३ र १४ गते ३ दिन मध्यपुर महोत्सवको आयोजना गर्न लागेको छ । साही महोत्सवको तयारीबारे जानकारी दिन विहीबार मध्यपुर थिमिको लायकूमा पत्रकार सम्मेलनको आयोजना गरेको छ । सो सम्मेलनमा आयोजक मध्यपुर थिमि नगर प्रमुख सुरेन्द्र श्रेष्ठले ३ पृष्ठ लामो प्रेस विज्ञप्ति पढेर तयारीबारे जानकारी गराए । सम्मेलनमा नगर उपप्रमुख विजयकृष्ण श्रेष्ठका साथमा वडा अध्यक्षहरुको पनि उपस्थिति रहेको थियो ।

**प्रेस विज्ञप्तिको पूर्ण पाठ**

आदरणीय सञ्चारकर्मी मित्रहरु,

सर्वप्रथम हामीले छोटो समयमा प्रवाह गरेको सूचनामा पनि यहाँहरुले जुन उत्साहजनक उपस्थिती जनाउनुभयो, त्यसका लागि आभार व्यक्त गर्दै आजको पत्रकार सम्मेलनमा स्वागत गर्न चाहन्छु ।

आज हामी मध्यपुर थिमि नगरपालिकाले यही पौष १२, १३ र १४ गते आयोजना गर्न गइरहेको 'मध्यपुर महोत्सव-२०८१' को बारेमा जानकारी दिने उद्देश्यले आयोजित पत्रकार सम्मेलनमा भेला भएका छौं । आशा छ, यहाँहरुको लोकप्रिय सञ्चारमाध्यम मार्फत देश विदेशमा रहेका आमनेपाली नागरिक एवम् विदेशी नागरिकहरुले मध्यपुर महोत्सवका बारेमा जानकारी प्राप्त गर्नेछ र प्रत्यक्ष एवम् अप्रत्यक्षरुपमा महोत्सव अवलोकन गर्नेछ ।

१. मध्यपुर थिमि

काठमाण्डौं उपत्यकाको केन्द्र भागमा अवस्थित मध्यपुर थिमि नगरपालिका पुरातात्विक एवम् साँस्कृतिक मूर्त तथा अमूर्त सम्पदाहरुले भरिपूर्ण मध्यकालिन शहर हो । थिमि र बोदे जस्ता किराँतकालिन बस्तीको साथै नगदेश, तिगनी, निकोसेरा र ल्हौंकिंथु (लोहकिल्थली) लगायतका ऐतिहासिक बस्तीहरु रहेको यस नगरको कला, सँस्कृति, पुरातात्विक सम्पदा, परम्परागत पेशा, मनोरम प्राकृतिक सौन्दर्य, मौलिक जीवनशैलीले पर्यटकीय आकर्षण बढ्दै गएको छ ।

यहाँ ७५० को संख्यामा सानाठूला मूर्त एवम् सय भन्दा बढी अमूर्त सम्पदाहरु सु-सज्जित रहेको छ । यस नगरपालिकाको ऐतिहासिक ३२ खटको बिस्काः जात्रा, म्ये प्वाः खनेगु जात्रा (जिब्रो छेड्ने जात्रा), लोकेश्वर जात्रा, द्यः प्याखँ (निलबाराही गण नाच), पुलुकिसि जात्रा, महाकाली नाच, भैलः प्याखँ (भैरव नाच), भतिमाली प्याखँ (ईन्द्र अप्सरा नाच), अष्टमातृका नाच विशेष रुपले चर्चित रहेको छ ।

यसैगरी हरियो तरकारी,

बाँकी पेज ७ मा

# कसले लेख्ने सीमान्तकृतको इतिहास ?

राजनकुमार दिक्पाल

सामाजिक र भौगोलिक विविधताले नेपालको सौन्दर्य भरिपूर्ण छ तर यहीँ विविधताभित्र अनेकौं असमानता पनि छन् । ती असमानतालाई विभिन्न कोणबाट निरुपण गर्न प्राज्ञिक माध्यमबाट पनि प्रयास थाल्नुपर्ने ठूलो आवश्यकता छ । विकास र शान्तिका लागि सामाजिक असमानता ठूलो बाधक हो ।

समतामूलक समाज निर्माणका लागि विगतमा भएका कमजोरीको इतिहास बटुलेर त्यसलाई निफल्न जरुरी छ । विगतमा राज्यबाटै ऐन निर्माणका क्रमबाट भएका कमीकमजोरीले कतिपय जातिगत र सामाजिक समूह अहिले पनि सीमान्तकृत अवस्थामा गुज्रिएका छन् । त्यसैले सीमान्तकृतको छुट्टै इतिहास लेखनको क्षेत्रले पनि यथोचित प्रोत्साहन पाउन सकेन । नेपालको इतिहास भनेकै राजा महाराजाको गाथा हो भन्ने धारणालाई चिर्न पनि अब सीमान्तकृतको इतिहास लेखनले उचित वातावरणको खोजी गरिरहेको यस प्रसङ्गमा स्मरणीय छ ।

नेपालको इतिहास लेखन

तत्कालीन इष्ट इन्डिया कम्पनीका कर्णेल विलियम कर्कप्याट्रिकले सन् १८११ (विसं १८६८) मा प्रकाशित गरेको 'एन एकाउन्ट अफ द किङडम अफ नेपाउल' नेपालका बारेमा लेखिएको पहिलो इतिहासको पुस्तक हो । उनी १८४९ सालमा नेपाल आएका थिए । एक महिना जति नेपाल बस्दा उनले जे जति टिपोट गर्न भ्याए, त्यसैलाई उनले पुस्तकका रुपमा प्रकाशित गरे । त्यसको आठ वर्षपछि फ्रान्सिस ह्यामिल्टनले 'एक एकाउन्ट अफ द किङ्डम अफ नेपाल' (सन् १८१९) प्रकाशित गरे । नेपालको इतिहास लेखिएको यो दोस्रो पुस्तक हो ।

नेपालमा इस्ट इन्डिया कम्पनीको रेजिडेन्स खुलेपछि ह्यामिल्टन एक चिकित्सकका रुपमा नेपाल आएका थिए । त्यही मौकामा उनले नेपालको इतिहास बटुलेर पुस्तकको आकार दिए । विदेशी लेखकले नेपालको इतिहास प्रकाशित गरेको एक सय तीन वर्षपछि १९७९ सालमा बल्ल एक नेपाली लेखक अम्बिकाप्रसाद उपाध्ययले 'नेपालको इतिहास' प्रकाशित गरे । भारतमा रहेर कानुनविद्का रुपमा काम गरिरहेको बेला उनले यो पुस्तक प्रकाशित गर्दा चन्द्रशमशेरले नेपालको शासन चलाइरहेका थिए । 'नेपाल देशका अधिपति', 'विष्णुको अंश' आदि विशेषणका साथ चन्द्रशमशेरलाई नै समर्पण गरिएको यो पुस्तक राणाहरुको प्रशंसाले भरिएको छ ।

राणाकालजस्तो त्यो अन्धकार युगमा पुस्तक प्रकाशित गर्नु एक जोखिमपूर्ण काम थियो । त्यस्तो जोखिमपूर्ण समयमा प्रातोत्रराज पाण्डे र पं नयराज पन्त मिलेर २००४ साल 'नेपालको सङ्क्षिप्त इतिहास'को प्रकाशन भयो । त्यहीं बेला भारतमा आएको नवजागरणले त्यहाँ रहेका नेपालीलाई पनि प्रभाव पारेको थियो । त्यसैबेला दार्जिलिङमा सूर्यविक्रम ज्ञवालीले द्रव्य शाह र पृथ्वीनारायण शाहको इतिहास

बाँकी पेज २ मा

# चाँगुनारायणमा जोखिम मूल्यांकन तथा योजना तर्जुमा कार्यशाला




भक्तपुर । चाँगुनारायण नगरपालिकाको विपद् जोखिम मुल्यांकन तथा योजना तर्जुमा कार्यशाला सम्पन्न भएकोछ । आइसेट नेपाल तथा डिसिए नेपालको आर्थिक तथा प्राविधिक सहयोगमा सञ्चालित नेक्सस परियोजना अन्तर्गत विपद् जोखिम मुल्यांकन तथा योजना तर्जुमा कार्यशाला आयोजना गरिएको हो । चाँगुनारायण नगरपालिकाका नगर प्रमुख जीवन खत्रीको प्रमुख आतिथ्यतामा सम्पन्न २ दिने कार्यशालामा नगरपालिकाका नगर उपप्रमुख रमेश बुढाथोकी, प्रमुख प्रशासकीय अधिकृत शिव प्रसाद हुमेगाँइ, वडा नं २,४,६ र ७ का वडा अध्यक्षहरु क्रमशः सोम प्रसाद प्रधान, रोज बहादुर तामाङ्ग, धन बहादुर लामा, श्याम कृष्ण नँयाजु श्रेष्ठ, ८ नं वडाका का.वा वडाध्यक्ष अनिता नेपाली, ९ नं का वडा सदस्य विद्यापति पुवार थापा, ५ नं का वडा सदस्य प्रभुराम थापा, आइसेट नेपालका कार्यकारी निर्देशक कन्चनमणि दिक्षित, डिसिएका कार्यक्रम व्यवस्थापन दिनेश गुरुङ्ग, नगरपालिकाका विपद् व्यवस्थापन इकाई प्रमुख दिनेश थापा, परामर्शदाता सुरेश भट्टराई, दिपक मरहट्ठा, आइसेट नेपालका कार्यक्रम संयोजक अशोक महर्जन, फिल्ड अधिकृत भरत ढुंगाना, ९ वटै वडाका वडा सचिवहरु लगायत नगरपालिकाका तथा आइसेट नेपालका कर्मचारीहरु गरी ४० जनाको उपस्थिती रहेको थियो ।

२ दिने कार्यशालाको उद्घाटन गर्दै नगर पालिकाका नगर प्रमुख खत्रीले चाँगुनारायणलाई विपद् उत्थानशील नगरपालिका बनाउनको लागि नगरपालिकाले आफ्नै ऐन, नीति, नियम, कार्यविधि र योजनाहरु बनाई विपद् जोखिम न्यूनीकरण सम्बन्धि विभिन्न कार्यक्रम तथा गतिविधिहरु संचालन गर्दै आएको बताए । यस आर्थिक वर्षमा नगरपालिकाले विपद् व्यवस्थापनको लागि ६ करोड ३० लाख बजेट बिनियोजन गरेका जानकारी दिदै नगर प्रमुख खत्रीले यस वर्षको मनसुनबाट क्षति भएका भौतिक संरचनाहरु पूर्ननिर्माणको लागि योजनामा छुट्याएको बजेटबाट १० प्रतिशत रकम कटौती गरी विपद् व्यवस्थापन कोषमा जम्मा गर्ने निर्णय कार्यपालिका बैठकले गरेको जानकारी दिए । उनले पूर्ननिर्माणको लागि आवश्यक थप बजेट तथा योजनाको लागि प्रदेश तथा संघिय सरकार समक्ष अनुरोध गरिएको पनि बताए । नगर प्रमुख खत्रीले बार्षिक रुपमा गरीने विपद् जोखिम मूल्यांकन कार्यले नगरपालिकाले विपद् जोखिम न्यूनीकरणको क्षेत्रमा पुरा गर्नुपर्ने मापदण्ड र क्षमता अभिवृद्धिको लागि मार्गदर्शन गर्ने जानकारी दिए ।

नगर उपप्रमुख रमेश बुढाथोकीले विपद्को समयमा सर्वप्रथम समुदायका मानिसनै परिचालित हुने भएकाले नगरपालिकाले समुदायमा प्रथम उद्धारकर्ता तयार गरी विपद् पूर्वतयारी तथा प्रतिकार्य योजना अनुसार वडास्तरमा कृत्रिम घटना अभ्यास गरेर समुदायलाई सम्भावित विपद्संग सामना गर्नको लागि सक्षम बनाउने बताए । उनले यस वर्ष आगलागी, बाढी, पहिरो, हुरीबतास र जनावर आतंकबाट प्रभावित ३४ परिवारलाई राहत वितरण गरिएको जानकारी दिए ।

आइसेट नेपालका कार्यकारी निर्देशक कंचनमणि दिक्षितले नगरपालिकासंगको साझेदारीमा संचालित नेक्सस परियोजना मार्फत संचालित गतिविधिहरु र नगरपालिकाले आफ्नै पहलमा तयर गरेका विपद् जोखिम न्यूनीकरणका गतिविधिहरुका कारण उल्लेख्य प्रगती गरेको बताए । उनले नेक्सस परियोजना मार्फत चाँगुननारायण नगर पालिकासंग विपद् व्यवस्थापनको क्षेत्रमा सहकार्य गर्न पाएकोमा नगरपालिका प्रति हार्दिक आभार व्यक्त गरे ।

परार्मदाता सुरेश भट्टराई तथा दिपक मरहट्ठाले प्रकोप जोखिम न्युनीकरणका लागि संयुक्त राष्ट्रसंघ कार्यालयले शहरहरुका लागि तयार गरेको विपद् उत्थानशीलता स्कोर माथिको प्रस्तुतीकरण गरेको थियो भने अघिल्लो वर्ष चाँगुनारायण नगरपालिकाले प्राप्त गरेको अंकभार र पुरा गरेका मापदण्डको बारेमा पुनरावलोकन गरेको थियो ।

संयुक्त राष्ट्रसंघीय विपद् जोखिम न्यूनीकरण स्कोर कार्ड प्रणाली विपद् जोखिम न्यूनीकरण कार्यक्रमको लागि राष्ट्रसंघले तयार पारेको हो । यो संयुक्त राष्ट्रसंघ सचिवालयको एक अंग हो । यसले सेन्डाई ढाँचा अनुरुप विपद् जोखिम न्यूनीकरण कार्यक्रम लागू गर्न र पूनरावलोकन गर्न सहयोग गर्दछ । सेन्डाई ढाँचाको चार मुख्य प्राथमिकताहरु यसमा समावेश गरीएको छ । यो स्कोर कार्ड प्रणाली अन्तर्गत पालिकाहरुको विपद् जोखिम मुल्यांकन गर्न दश आवश्यकताहरु तोकिएका छन् जस अन्तर्गत दश आवश्यकताहरु निम्नानुसार छन् ।

१. उत्थानशीलताका लागि संगठन र ढाँचा,
२. वर्तमान र भविष्यका जोखिम परिदृश्यहरुको पहिचान, बुझाई र प्रयोग,
३. उत्थानशीलताको लागि वित्तीय क्षमता सुदृढिकरण,
४. उत्थानशील सहरी विकास र ढांचा,
५. राष्ट्रिय मध्यबर्ती क्षेत्रको सुरक्षाको लागि प्राकृतिक पारिस्तिथिक प्रणालीद्वारा गरिने संरक्षणात्मक कार्यहरु,
६. उत्थानशीलताको लागि संस्थागत क्षमता बलियो बनाउने,
७. उत्थानशीलताको लागि सामाजिक क्षमतालाई बुझ्नुहोस् र बलियो बनाउनुहोस्,
८. उत्थानशील पूर्वाधारमा वृद्धि,
९. प्रभावकारी प्रकोप प्रतिकार्य सुनिश्चित गर्ने,
१०. छिटो र बलियो पुनर्लाभ पर्दछन् ।

जसमा रहेर कार्यशालामा विभिन्न प्रश्नहरु सोधिए थिए र सहभागिहरुबाट आएका उत्तरका आधारमा ० देखि ३ अंक सम्म प्रदान गरीएको थियो ।

कार्यशालाको समापन कार्यक्रममा चाँगुनारायण नगरपालिकाका प्रमुख प्रशासकीय अधिकृत शिवप्रसाद हुमेगाँइले वार्षिक रुपमा विपद् सम्बन्धी योजनाहरु अद्यावधिक गर्दै नगरपालिकाको नयाँ भवनमा स्थानीय आपत्कालिन कार्य सञ्चालन केन्द्र सञ्चालन गरेको बताए । उनले उपलब्ध साधन श्रोतको उच्चतम प्रयोग गर्दै नगरपालिकाले विपद् पूर्वतयारी तथा प्रतिकार्यका कामहरु गर्दै आएको बताए । उनले विपद् उत्थानशील समुदाय निर्माण गर्ने कार्यमा नगरपालिकालाई नेक्सस परियोजना मार्फत आर्थिक तथा प्राविधिक सहयोग गर्दै आएकोमा आइसेट नेपाल र डिसिए नेपाल लगायत साझेदार संस्थाहरु प्रति आभार व्यक्त गरे ।

# पर्यटन विकासका लागि मध्यपुर महोत्सव – नगर प्रमुख श्रेष्ठ

भक्तपुर । मध्यपुर थिमि नगरपालिकाका नगरप्रमुख सुरेन्द्र श्रेष्ठले पुस १२ देखि १४ गते ३ दिनसम्म मध्यपुर महोत्सव-२०८१ आन्तरिक र बाह्रय पर्यटकलाई आकर्षित गर्दै पर्यटन विकासका लागि आयोजना गरिने जानकारी दिएका छन् । थिमिको सामाजिक संस्था ओस्ला नेपालको २५ वर्ष रजत महोत्सवको उद्घाटन सत्रमा संस्थाले प्रकाशन गरेको स्मारिका विमोचन गर्दै नगरप्रमुख श्रेष्ठले उक्त विचार व्यक्त गरेको हो ।

ओस्ला नेपालका अध्यक्ष राजेश श्रेष्ठको सभापतित्वमा भएको उक्त कार्यक्रममा नगरप्रमुख श्रेष्ठले यस क्षेत्रको जीवनशैली, खानाका परिकार, मौलिकता, पेशा, व्यवसाय, नाच एवं जात्राको बारेमा सम्पूर्ण जानकारी दिइने मध्यपुर महोत्सव अवलोकनका लागि सबैसँग आग्रह गरे ।

कार्यक्रमका विशेष अतिथि नगरपालिकाका उपप्रमुख विजयकृष्ण श्रेष्ठले मध्यपुर थिमिको सम्पदा र संस्कृतिलाई आयआर्जनसँग जोड्न नगरपालिकाले आन्तरिक र बाह्रय पर्यटकसँग सम्बन्धित विविध कार्यक्रमहरु आयोजना गर्ने जानकारी दिदैं नगरपालिकाले शक्षा र स्वास्थ्य क्षेत्रमा उल्लेख्य कामहरु गरिरहेको बताए ।

कार्यक्रममा इतिहासविद् प्रा.डा. पुरुषोत्तम लोचन श्रेष्ठ र थिमिका नाच र बाध्य गुरुको रुपमा रहेका श्रीगोपाल प्रजापतिलाई सम्मान गरिएको थियो । त्यस्तै कार्यक्रममा दाफा भजनका गुरु कृष्णमान बाके श्रेष्ठ र इन्द्रअप्सरा नाचका गुरु ज्ञानलाल कायस्थश्रेष्ठलाई समेत सम्मान गरिएको थियो ।

ओस्ला नेपालका अध्यक्ष श्रेष्ठले ओस्ला नेपाल सामाजिक, सांस्कृतिक, स्वास्थ्यदेखि व्यक्तित्व र नेतृत्व विकासमा क्रियाशिल रहेको जानकारी दिए । कार्यक्रममा ओस्ला नेपालको रजतवर्ष स्मारिका २०८१ र राजेन्द्र तुबन्जा श्रेष्ठद्धारा लिखित नेवारी भोजका प्रकार र परिकार पुस्तक विमोचन गरिएको थियो । ओस्ला नेपालका सचिव रोशन बज्राचार्यले सहजीकरण गरेको कार्यक्रममा ओस्ला नेपालका उपाध्यक्ष सुशील जोशीले स्वागत मन्तव्य व्यक्त गरेको थियो कार्यक्रम शंखधर बैंक्वेटमा भएको थियो ।

कार्यक्रममा ओस्ला नेपालका संस्थापक अध्यक्षहरुलाई पनि सम्मान गरिएको थियो ।

# सरकारको अनुरोधपछि यो वर्ष इटा पोल्न कार्य ढिलो हुने

काठमाडौं । देशभरि संचालनमा रहेका इटा उद्योगीहरुले यो वर्ष माघ १ गतेदेखि मात्रै इटाभटामा इटा पोल्न थाल्ने भएका छन् । नेपाल सरकार वातावरण मन्त्रालयको आग्रहलाई स्वीकार गर्दै उद्योगीहरुले पहिला भन्दा ढिला मात्रै इटाभटामा इटा पोल्न आगो लगाउने भएको जनाए ।

वातावरण मन्त्रालयले वातावरण प्रदूषण वढी हुने भएको भन्दै व्यवसायीहरुलाई सकेसम्म फागुनमा मात्रै इटाभटामा इटा पोल्न केही वर्षदेखि अनुरोध गर्दै आएको थियो । तराईमा शित लहर, काठमाडौं उपत्यकामा हुसुले वातावरण प्रदूषण वढी हुने सरकारको भनाई हो । माघ फागुनमा हावाहुरी चलेर कम मात्रै वातावरण प्रदूषण हुने भएको जनाइएको छ ।

बागमति प्रदेश इटा व्यवसायी संघका अध्यक्ष आशाकाजी त्वानाबासु व्यवसायीलाई पनि मर्का नपर्ने र वातावरण प्रदूषणलाई पनि ध्यान दिएर यो वर्ष देशभरि साविक भन्दा ढिला मात्रै इटाभटामा इटा पोल्ने मिति तय भएको सुनाए । सरकारले भनेजस्तै फागुनमा मात्रै इटा पोल्न सुरु गर्दा हामी व्यवसायी मर्कामा पर्छौं, उनले भने, यसो भनेर वातावरण प्रदूषण हुने विषयलाई पनि वेवास्ता गर्न भएन, त्यही कारण दुवैलाई मिलाएर माघ १ गतेमात्रै इटा पोल्ने भएका हौं ।

माघदेखि जेठसम्म गर्दा व्यवसायीलाई पनि पाँच महिना काम गर्न पाइने भएर खासै समस्या नभएको उनको भनाई थियो । भक्तपुर इटा उद्योग व्यवसायी संघका अध्यक्ष नातिभाइ ह्योम्वाले भक्तपुरले सरकारको अनुरोधलाई स्वीकार गरी गतवर्षदेखि नै माघ १ गते मात्रै इटा पोल्न थालेको स्मरण गरे । मंसिर महिना सिद्धिए लगत्तै भक्तपुरमा काँचो इँटा उत्पादन सुरु भएको भए पनि माघ १ गतेदेखि मात्रै इटा पोल्न थाल्ने उनले सुनाए ।

यहाँका इँटाभट्टामा भक्तपुरसँगै काभ्रे, सिन्धुपाल्चोक, रामेछाप, सिन्धुली, बारा, पर्सा, सर्लाही, महोत्तरी, सिराहा, सप्तरीलगायत जिल्लाका मजदुर परिवारसहित इँटा पार्न आउँछन् । त्यस्तै पश्चिमका रुकुम, रोल्पा, सल्यान र बाँकेका मजदुर इँट बोक्न भक्तपुरसम्म आउने गरेका छन् । जिल्लाका इँटा व्यवसायीका अनुसार अहिले पनि इँटा पार्ने मजदुर आउने क्रम जारी छ । इँटा पार्ने मजदुर सबै आइनसकेकाले इँटा बोक्ने मजदुर पनि आउन बाँकी रहेको उनीहरूको भनाइ छ । त्यस्तै इँटा पोल्ने भट्टामा काम गर्ने बोझाइम्यान र फायरम्यान पनि आउनै काँकी छ ।

व्यवसायीहरूका अनुसार बोझाइम्यान र फायरम्यान सबै भारतबाट आउँछन् । इँटाभट्टामा आगो लगाउने समय नभएसम्म उनीहरू आउँदैनन् । एउटा इँटाभट्टाले करिब ४५ लाखसम्म पाको इँटा उत्पादन गर्ने तथ्यांक छ । नेपालभरि ११ देखि १२ सय इटा उद्योग रहेको तथ्यांक छ । ३० वटा इटा उद्योग रहेको बागमति प्रदेशका काठमाडौं, ललितपुर, भक्तपुर, काभ्रे, धादिङलगायतका जिल्लामा इटा उद्योग सञ्चालन छन् । यसबाहेक बागमति प्रदेशबाहेक सर्लाही, रौतहटलगायतका तराई जिल्लाहरुमा इटा उद्योग सञ्चालन हुन्छन् । साइज र गुणस्तर अनुसार अहिले सामान्यतया एक हजार पाको इटाको मूल्य डेलिभरीसहित १५ हजारदेखि १६ हजारसम्म रहेको जनाइएको छ ।



## कसले....

लेखेका ज्ञवालीले 'भानुभक्तको जीवनी', 'अमरसिंह थापा', 'वीर बलभद्र' जस्ता इतिहास पनि लेखे । भानुभक्त आचार्य, अमरसिंह थापा, बलभद्र कुँवरहरु कुनै राजा महाराजा होइनन् । भुइँबाट उठेर देशको सेवा गर्ने यी व्यक्तित्वहरुको इतिहासको लेखनले त्यसबेलै इतिहास राजा महाराजाहरुको मात्रै हुँदैनन् भन्ने मान्यता स्थापित हुन पुगेको थियो । राणाशासनकै समयमा सिक्किमको गान्तोकमा रहेर इमानसिंह चेम्जोङले 'किरात इतिहास' लेखेर इतिहास लेखनको क्षेत्रमा अर्को आयाम थपे । उनले जातिगत र सामाजिक समूहको पनि छुट्टै इतिहास लेख्न सकिन्छ भन्ने अवधारणा त्यसबेलै प्रस्तुत गरेका थिए तर त्यसपछि लेखिएका इतिहासहरु राजा महाराजाकै सेरोफेरोबाट खासै मुक्त हुन सकेको देखिँदैन ।

सीमान्तकृत समूह

राजा जयस्थिति मल्लको थितिलाई नेपालको प्रारम्भिक कानुनको प्रारुप मानिएको छ । विसं १९१० मा जङ्गबहादुरले बनाएको मुलुकी ऐन नै नेपालको पहिलो लिखित कानुन हो । यो ऐनले नेपालका जाति र सामाजिक समूहलाई विभेदयुक्त ढङ्गले विभाजित गरेर एउटै अपराधमा जातिअनुसार कसैलाई धेरै र कसैलाई कम सजाय दिने व्यवस्था गर्‍यो ।

'छोइछिटो हाल्नु पर्ने अछूत' र 'छोइछिटो हाल्नु नपर्ने अछूत' भनी कानुनी रुपमा तोकेरै छुवाछूतलाई मुलुकी ऐनले मान्यता दियो भने 'मासिन्या मतुवाली' र 'नमासिन्या मतुवाली' भनेर समुदायमा अर्को विभेदको पर्खाल पनि मुलुकी ऐनले नै खडा गर्‍यो । आज यिनै जाति तथा समुदाय सीमान्तकृत अवस्थामा छन् । विगतमा गरिएका यस्ता कमीकमजोरीले कतिपय जाति तथा समुदाय सीमान्तकृत अवस्थामा छन् । उनीहरु आर्थिक, सामाजिक, शैक्षिकजस्ता सबै क्षेत्रमा पछौटेपन र अवसरविहीनताको सिकार बनेका छन् । उनीहरुको इतिहास पनि न्यायोचित ढङ्गले लेख्नु त कता हो कता, अग्रज इतिहासकारले यसप्रति गम्भीर भएर विचार गर्ने चेष्टासमेत गरेको पाइँदैन । त्यसैले पनि इतिहास भनेकै राजा महाराजाको गाथा भन्ने धारणा बलियो रुपमा स्थापित हुन पुगेको हो । यसले इतिहास विधालाई नै न्याय गरेको ठहर हुँदैन ।

इतिहासको स्रोत

लिखित दस्तावेज नै इतिहासको मूल स्रोत हो । इतिहास भनेको विगतको घटनाको प्रामाणिक लेखन र प्रस्तुति हो । विगतमा लेखिएर सुरक्षित रुपमा राखिएका दस्तावेजहरुका आधारमा प्रामाणिक इतिहास लेखिन्छ । यसैगरी, सम्बन्धित घटनाका साक्षीले व्यक्त गरेको धारणाहरु पनि इतिहासका प्रमाणहरु हुन् ।

सीमान्तकृत समुदायको इतिहास लेखनको मूल समस्या भनेकै उनीहरुसँग सम्बन्धित लिखित दस्तावेजको अभाव हो । सीमान्तकृत समुदायमा अहिले पनि लेखन तथा दस्तावेजीकरणको अभाव छभने विगतमा लेखन र दस्तावेजीकरणको परम्परा नै थिएन । इतिहासको महत्वपूर्ण स्रोतका रुपमा रहेका शिलालेख, भोजपत्र, लालमोहर, इस्तिहार, मुद्रा आदि विगतमा राजा, मुख्तियार वा भारदारहरुबाट प्रसारित हुने गर्थे । यस्ता सामग्रीमा तत्कालीन समाजका कुलीन र अधिकारसम्पन्न वर्गका सवालले मूलरुपमा प्राथमिकता पाउने गर्दा पनि सीमान्तकृत समुदायको इतिहास लेखनमा समस्या आएको हो भन्ने निष्कर्ष निकाल्न सकिन्छ ।

नेपाली लेखकको कलमबाट इतिहास लेखनको परम्परा सुरु हुँदा सम्बन्धित लेखकले तत्कालीन समयका शासकको गुणगानमा प्रशस्त कलमको मसी खर्च गरेको प्रसङ्ग माथि उल्लेख गरिसकिएको छ । नेपालमा राजतन्त्र सक्रिय रहँदासम्म पुराना ऐतिहासिक सामग्रीहरुको अध्ययनको पहुँच सहज पनि थिएन । यस्तो अहसज परिस्थितिमा राजदरबारको प्रतिकूल हुने गरी इतिहास लेख्नु जोखिमपूर्ण पनि थियो । त्यसैले नेपाली इतिहासकारहरुले सकेसम्म राजदरबारप्रति नरम भाषा प्रयोग गर्दै इतिहास लेख्दै जाँदा इतिहास भनेकै राजा महाराजाको गुणगान हो भन्ने प्रतीत हुन पुग्यो । यिनै कारणहरुले इतिहासकारहरुले सीमान्तकृतहरुको सवाललाई सीमान्तमा मात्र पारेनन्, यसप्रति उनीहरुको खासै ध्यानाकर्षण हुन सकेन । परिणाममा सीमान्तकृतहरुको इतिहास लेखिएन ।

हिजो सीमान्तकृतहरुको इतिहास लेखिएन भनेर अब लेखकहरुले कलम थन्क्याएर बस्न पनि भएन । सीमान्तकृतहरुको इतिहास लेखनको क्षेत्र व्यापक छ तर यसमा लेखन प्रयासहरु भने नगण्य छ । त्यसो त राजा महाराजाहरुबाट प्रसारित शिलालेख, लालमोहर, इस्तिहार, सनद आदिबाटै सीमान्तकृतहरुको ऐतिहासिक सवाल खोज्न नसकिने होइन । उदाहरणका लागि, तत्कालीन श्री ३ महाराज तथा प्रधानमन्त्री भीमशमशेरले १९८९ भदौ ६ मा जारी गरेको इस्तिहारलाई लिन सकिन्छ । यो इस्तिहारमा विगतमा तामाङ लेख्न नपाइने अवस्था रहेकामा अबदेखि भोटे नभनी तामाङ भनी लेख्ने बोलाउने गर्नू भन्ने उल्लेख छ । यसबाट विगतमा तामाङहरुले भोग्न परेको जातीय पहिचानकै इतिहासलाई खोतलखातल गर्न ठूलो सहयोग मिल्छ ।

यस्तै १८८८ कात्तिक सुदी १४ मा तत्कालीन राजाले दूधकोशी र बहादुरा खोला पूर्व र अरुण पश्चिम माझकिरातका तालुकदारहरुको नाममा जारी गरेको एक रुक्कामा राई, मझिया, किराती, मुर्मी आदिका प्रत्येक घरबाट हरेक वर्ष जनावरको छाला अनिवार्य सङ्कलन गरी सरकारले सञ्चालन गरेको मेगेजिन अड्डामा दाखिल गर्न आदेश दिइएको छ । जनावरको छाला बुझाउन नसक्ने प्रत्येक घरबाट हरेक वर्ष दुई-दुई आनाको दरले दस्तुर उठाउन उल्लेख गरेकामा कामी र सार्कीको घरबाट आठ-आठ आना दस्तुर उठाउन आदेश दिइएको छ । यो आदेशबाट अहिले पनि दलित उत्पीडित अवस्थामा रहेका कामी र सार्कीहरुलाई राज्यबाट कस्तो आर्थिक उत्पीडन र शोषण परेको थियो भन्ने इतिहासको खोजी गर्न ठूलो सहयोग मिल्छ ।

कसले लेख्ने इतिहास ?

इतिहास अनुसन्धानमा हात बसिसकेका इतिहासकारहरुले सीमान्तकृतहरुको इतिहास लेखी दिए अत्युत्तम हुने थियो । अझ इतिहास लेखनमा नाम चलेका र स्थापित इतिहासकारहरुले नै सीमान्तकृतहरुको इतिहास लेखिदिए त उनीहरुको नामसँगै सीमान्तकृतहरुको ऐतिहासिक सवालहरु सहज रुपमा स्थापित हुने थियो तर स्थापित इतिहासकारहरुले सीमान्तकृतहरुको इतिहासलाई आजसम्म त्यति महत्व दिएनन् । त्यसैले अब सीमान्तकृतहरु आफैं आफ्नो इतिहास लेखनका लागि तयार हुनु नै एक उत्तम विकल्प हुन सक्छ । गौतम बुद्धको भनाइ छ, 'अप्पो दीपो भवः' अर्थात् आफ्नो दीपक आफैं बन । आफ्नो इतिहासप्रति चिन्ता हुनेहरुले आफ्नो इतिहासको अन्वेषण र लेखन आफैं गर्न तत्पर हुनुपर्छ । अरूको भर परेर हुँदैन ।

(लेखक इतिहास अध्ययनमा रुचि राख्ने पत्रकार हुन्) संचारकर्मीबाट

# नेपालको समृद्धिका लागि बिआरआई महत्वपूर्ण

काठमाडौं । चीनको महत्वपूर्ण विश्वव्यापी परियोजना बीआरआईमार्फत नेपालको समृद्धि सम्भव हुने राजनीतिज्ञहरुले बताएका छन् । फ्रेण्डसिप फोरम फर नेप्लिज जर्नालिष्टले पुस ३ गते बुधबार विराटनगरमा आयोजना गरेको “नेपाल-चीन साँस्कृतिक तथा आर्थिक सम्बन्ध” विगतदेखि वर्तमानसम्म विषयक अन्तरक्रियामा बोल्दै राजनीतिज्ञहरुले सो विचार व्यक्त गरेका हुन् ।

एक दिने अन्तरक्रियामा प्रमुख अतिथीको आसनबाट बोल्दै कोशी प्रदेश सरकारका भौतिक पूर्वाधार विकास मन्त्री भूपेन्द्र राईले बीआरआईलाई कुनै पनि वहानामा विवादीत बनाउन नहुने बताए । नेपाल र चीनबीचको साँस्कृतिक तथा आर्थिक सम्बन्ध अत्यन्त पुरानो रहेको बताउँदै मन्त्री राईले बीआरआईलाई अनुदान वा ऋण हो भनि विवादित बनाउन नहुने बताए । साथै मन्त्री राईले मुलुकको विदेश नीति परिपक्व नहुँदासम्म त्यो राजनीतिक दलहरुको सत्तामा पुग्ने भर्याङ मात्र हुने पनि प्रष्ट पारे ।

कोशी प्रदेशका पूर्व समाजिक विकास मन्त्री तथा नेकपा एमालेका नेता जीवन घिमिरेले बीआरआई परियोजना नेपालको हितमा रहेको बताउदै बीआरआईले नै नेपाललाई भारतवेष्ठित परनिर्भरतालाई हटाउने विश्वास व्यक्त गरे । विश्वको समृद्धिसँग जोडिएको बीआरआईलाई नेपालको पूर्वाधार विकास र कनेक्टिभिटीमा जोड्न सक्दा यसले नेपालको समृद्ध बनाउने भएकाले बीआरआई परियोजनामा नेपाल जोडिएकोमा त्यसलाई सबैले स्वागत गर्नुपर्ने धारणा राखेका थिए ।

कोशी प्रदेशका पूर्वमन्त्री तथा प्रदेश सांसद लिलाबल्लभ अधिकारीले नेपालको शिक्षा, स्वास्थ्य, कृषि, पर्यटन जस्ता क्षेत्रको विकासमा चीनको विकासलाई सदूपयोग गर्नुपर्ने बताए । नेपाल एक चीन नीतिप्रति प्रतिवद्ध रहेको बताउदै सांसद अधिकारीले प्रधानमन्त्री ओलीको भर्खरै सम्पन्न चीनको औपचारिक भ्रमणका क्रममा भएका बीआरआईसँग सम्बन्धित परियोजनाहरुलाई स्वागत गर्नुपर्ने धारणा राखे ।

कोशी प्रदेशका प्रदेश सभा सदस्य तथा पूर्वमन्त्री गणेश प्रसाद उप्रेतीले चीनको बीआरआई परियोजनाबाट नेपालले महत्वपूर्ण सहयोग प्राप्त गर्न सक्ने भए पनि बीआरआई सम्झौताको व्यवहारिक पक्ष अहिलेको सरकारले पुरा गर्न नसक्ने हो कि भनि चिन्ता व्यक्त गरे । साथै उनले केपी शर्मा नेतृत्वको सरकार आफै बीआरआईका बारेमा अन्योलमा रहेको पनि उल्लेख गरे ।

कोशी प्रदेशका प्रदेश सभा सदस्य शोभा चेम्जोङ पालुङ्वाले नेपाल र चीनबीच प्राचीनकालदेखिनै ऐतिहासिक सम्बन्ध रहेको भन्दै नेपालको पूर्वाधार विकासमा चीनले महत्वपूर्ण सहयोग गरेको बताए । चीन सरकारको सहयोगमा निर्माण भएको कोदारी राजमार्गमार्फत नेपाल र चीनको व्यापारीक सम्बन्ध अझ विकास भएको बताउदै सांसद पालुङ्वाले नेपालको पर्यटन क्षेत्रको विकासमा चीनले ठूलो सहयोग गर्न सक्ने भएकोले नेपालका पर्यटकीय गन्तब्यका बारेमा चीन सरकारले प्रचार प्रसार मार्फत सहयोग गर्नुपर्ने धारणा ब्यक्त गरे ।

कोशी प्रदेशका प्रदेश सभा सदस्य तथा नेकपा एमाले कोशी प्रदेशका प्रमुख सचेतक विदुर लिङ्थेपले प्रधानमन्त्री केपी शर्माओलीले हालै गरेको चीनको औपचारिक भ्रमणमा भएका दशबुदे सम्झौताले नेपालको विकास निर्माणमा महत्वपूर्ण परिवर्तन हुने विश्वास व्यक्त गरे । साथै उनले चीनको हजारौं वर्ष पुरानो भाषा, संस्कृति र जीवनशैलीबाट नेपालीले पनि सकारात्मक सन्देश प्राप्त गर्न सक्ने प्रष्ट पारे ।

चीन अध्ययन केन्द्रका सचिव प्रकाश बाबु पौडेलले नेपाल बीआरआईको सदस्य देश भएको जानकारी दिनुहुँदै चीनको विकासबाट कसरी फाईदा लिन सक्छौं भन्ने कुरो महत्वपूर्ण भएकोले सबैले यस विषयलाई ध्यान दिनुपर्ने बताए । साथै सचिव पौडेलले चिनियाँ रेल नेपालहुँदै भारतसम्म विस्तार गर्दा त्यसले भारतलाई अझ धेरै फाईदा पुग्ने बताए ।

अग्रज पत्रकार यज्ञ प्रसाद शर्माले प्रधानमन्त्री केपी शर्मा ओलीले हालै सम्पन्न गर्नुभएको चीनको औपचारिक भ्रमणको प्रसंग उल्लेख गर्दै सो भ्रमणका क्रममा नेपाल र चीनकाबीचमा बीआरआई अन्तरगत भएका सहमतीहरुलाई व्यवहारमा प्रयोग गर्नुपर्नेमा जोड दिए । क्यापिटल मिडिया ग्रुपका अध्यक्ष शुशिल राउतले चीनले विश्वलाईनै आश्चर्यमा पार्ने हिसावले विकास निर्माण गरिरहेको जानकारी दिदै असल छिमेकी भएको नाताले नेपालले पनि चीनको जस्तै विकास ल्याउन सक्नुपर्नेमा आवश्यकता औल्याए । यसका लागि चीन र नेपालका सञ्चारगृहहरुबीचको आदान प्रदानलाई अझ प्रभावकारी बनाउनुपर्ने उनले सुझाव समेत दिए ।

चाईना ग्लोवल टेलिभिजन नेटवर्क सीजीटीएन नेपाली विभागका प्रमुख सुमेघाले नेपाल र चीनबीच जनस्तरमा दिनानुदिन सम्बन्ध विकसित हुँदै गएको बताउदै नेपालको भौतिक पूर्वाधार क्षेत्रको विकासमा चीनको निरन्तर सहयोग गरिरहेको जानकारी दिए । चीन र नेपालले विकास निर्माण लगायतका क्षेत्रमा साझेदारी गरिरहेको र बीआरआई मार्फत नेपालले आगामी दिनहरुमा अझ धेरै फाइदा लिनसक्ने उनको भनाइ छ ।

कार्यक्रम आयोजक संस्था फ्रेण्डसिप फोरम फर नेप्लिज जर्नालिष्टका अध्यक्ष रमेश हतुवालीले सुधार र खुलापन सुरु भएको ४५ वर्षको अवधिमा चीन विश्वको दोस्रो अर्थतन्त्र बनिसक्दा पनि नेपालको विकास निर्माण निन्याउरो हुनु दुःखको कुरो भएको भन्दै चीनको समृद्धिबाट दक्षिण अमेरिका र अफ्रिकी देशहरुले ठूलो फाइदा लिईरहेको बताउनुहुँदैले नेपालले पनि फाइदा लिनपर्ने प्रष्ट पारे । नेपालले चीनको बीआरआई महापरियोजनाबाट फाईदा लिन के कस्ता अभ्यासहरुलाई निरन्तरता दिनु आवश्यक छ भन्ने लगायतका विषयमा बीचार बुझ्ने उद्धेश्यले अन्तरक्रियाको आयोजना गरिएको उनले जानकारी गराए ।

नेपाल चीन जनमैत्री परिषद्का पूर्व अध्यक्ष तथा सीआरआई स्रोता क्लवहरुको राष्ट्रिय परिषद् नेपालका पूर्व उपाध्यक्ष लोकेन्द्र काफ्लेले भगवान गौतम बुद्धको शान्तिको सन्देश फैलन सुरु भएसँगै चीन र नेपालको सम्बन्ध सुरु भएको बताए । भृकुटी, अरनिको, फा स्यान, बुद्धभद्र लगायतका महामानवहरुले नेपाल र चीनबीचको सम्बन्धलाई जनस्तरसम्म पुर्याउन महत्वपूर्ण भूमिका निर्वाह गर्नुभएको उनले जानकारी दिए ।

सीआरआई स्रोता क्लवहरुको राष्ट्रिय परिषद् नेपालका पूर्व केन्द्रीय सदस्य डा. नविन चापागाईले नेपाल र चीनबीचको सम्बन्ध अत्यन्त पुरानो रहेको बताउदै सन् १९५५ मा कुटनीतिक सम्बन्ध स्थापना भएपछि यो सम्बन्ध अझ प्रगाढ हुँदै गएको बताए । साथै डा. चापागाईले नेपाल र चीनको सम्बन्ध मित्रता, समानता र सम्मानमा आधारित भएको धारणा व्यक्त गरे ।

सो कार्यक्रममा विभिन्न संघ संस्थाका प्रतिनिधिहरु, सीआरआई श्रोता क्लवहरुको राष्ट्रिय परिषद् नेपालका पदाधिकारी तथा सदस्यहरु, शिक्षक, कानून व्यवसायी, विद्यार्थी, समाजसेवी र सञ्चारकर्मी समेत गरि झण्डै १५० जनाको सहभागिता रहको थियो ।

# अन्तरिक्षमा भेटियो पृथ्वीमा भन्दा धेरै पानीको भण्डार !

एजेन्सी । खगोलविद्हरूले १२ अर्ब प्रकाश वर्ष टाढा ब्रह्माण्डमा ठूलो पानीको भण्डार फेला पारेका छन् । यो पानीको भण्डार ब्ल्याक होलको वरिपरि छ । यसको मतलब यो पानी ब्रह्माण्डको शुरुवात भएको केही समय पछिदेखि नै छ । यस जल भण्डारको मात्रा पृथ्वीका सबै महासागरहरू भन्दा १४० ट्रिलियन गुणा बढी छ । यो ब्ल्याक होल हाम्रो सूर्य भन्दा २० अरब गुणा ठूलो छ । यसको वरिपरि एक क्वासार (खगोलीय पिंड) छ जसले हजारौं ट्रिलियन सूर्यको बराबर ऊर्जा निकाल्छ । खगोलविद्हरूका अनुसार यो क्वासर ब्रह्माण्डमा अहिलेसम्म पहिचान गरिएको सबैभन्दा टाढाको र सबैभन्दा ठूलो पानीको भण्डार हो ।

क्यालिफोर्नियाको पासाडेनामा रहेको नासाको जेट प्रोपल्सन प्रयोगशालाका वैज्ञानिक म्याट ब्रैडफोर्डले यसको अध्ययन गर्ने टोलीको नेतृत्व गरिरहेका छन् । “यस क्वासर वरपरको वातावरण अद्वितीय छ किनभने यसले ठूलो मात्रामा पानी उत्पादन गरिरहेको छ,“ ब्राडफोर्डले भने । “यसले संकेत गर्छ कि पानी यसको प्रारम्भिक चरणहरूमा पनि सम्पूर्ण ब्रह्माण्डमा व्यापक थियो ।“

ब्रैडफोर्डको टोलीले खगोलविद्हरूको छुट्टै समूहसँग मिलेर एपीएम ०८२७९+५२५५ र यसको केन्द्रीय ब्ल्याक होलको अनुसन्धान गर्‍यो, जसले वरपरको पदार्थलाई आकर्षण गर्छ । ब्ल्याक होलले पदार्थलाई आकर्षण गर्ने क्रममा, यसले वरपरको ग्यास र धूलोलाई तातो पार्छ, जसले यति दूरीमा अणुहरूले पहिले कहिल्यै भरिएको छैन ।

क्वासरहरू के हुन ?

क्वासरहरू पहिलो पटक ५० वर्ष पहिले पत्ता लगाइएको थियो जब टेलिस्कोपहरूले अन्तरिक्षको दुर्गम भागहरूमा तीव्र चमकको रहस्यमय स्रोतहरू पत्ता लगाए । यी वस्तुहरू साधारण ताराहरू होइनन् । तिनीहरू टाढाका आकाशगंगाहरूको केन्द्रहरूबाट चम्कन्छन्, ती आकाशगंगाहरू भित्रका सबै ताराहरूलाई बाहिर निकाल्छन् । तिनीहरूको केन्द्रहरूमा सुपरमासिभ ब्ल्याक होलहरू छन्, हाम्रो सूर्यको द्रव्यमान भन्दा लाखौं वा अरबौं गुणा । यी ब्ल्याक होलहरूमा ग्यास र धुलो घुम्दा, पदार्थ तातो हुन्छ र ऊर्जा छोड्छ । यो ऊर्जा सबै तरंगदैर्ध्यहरूमा विकिरण गर्दछ, क्वासरहरूलाई अहिलेसम्म देखिएका सबैभन्दा उज्यालो र ऊर्जावान वस्तुहरू बनाउँछ ।

क्वासरहरूको अध्ययनले खगोलविद्हरूलाई प्रारम्भिक ब्रह्माण्डको बारेमा जान्न मद्दत गर्छ । किनभने आज हामीले देखेको प्रकाशले हामीसम्म पुग्न अरबौं वर्षको यात्रा गरेको छ । क्वासारहरूले आकाशगंगाहरूको गठन, पदार्थको वितरण, र प्रारम्भिक ब्रह्माण्ड संरचनाहरूको विकासको बारेमा जानकारी प्रदान गर्दछ । तिनीहरूले आकाशगंगाहरू बीचको पदार्थको वितरणलाई पनि नक्सा गर्न सक्छन्, अन्यथा लुकेका रहने क्षेत्रहरू प्रकट गर्छन् । केही क्वासरहरूले उच्च-गति कणहरूको विशाल जेटहरू पनि उत्सर्जन गर्छन् जुन विशाल दूरीहरूमा फैलिन्छ । यी जेटहरूले ब्रह्माण्डीय सामग्रीको सम्पूर्ण क्षेत्रहरूलाई असर गर्दै तारा निर्माणलाई प्रभाव पार्न सक्छ ।

पानीको अचम्मको खोज

खगोलविद्हरूले यस विशेष क्वासर वरपरको वायुमण्डलमा पानीको वाष्प पत्ता लगाए । वाष्प सयौं प्रकाश-वर्षहरूसम्म फैलिन्छ, जसमा एक प्रकाश-वर्ष लगभग छ ट्रिलियन माइल हुन्छ । यद्यपि ग्यास पृथ्वीको मापदण्डले पातलो छ, यो हाम्रो आकाशगंगाको समान क्षेत्रहरूको तुलनामा असामान्य रूपमा तातो र घना छ । लगभग माइनस ६३ डिग्री फरेनहाइटको तापक्रममा, ग्यास पृथ्वीको वायुमण्डल भन्दा लगभग ३०० ट्रिलियन गुणा कम घना छ । यद्यपि, यो सामान्य आकाशगंगाहरूमा पाइने ग्यासभन्दा पाँच गुणा बढी तातो र सयौं गुणा घना छ । यी असाधारण परिस्थितिहरूले यस क्षेत्रलाई एक अद्वितीय खोज बनाउँदछ ।

यो किन फरक छ?

पानीको भाप अणु मात्र होइन; यसको उपस्थितिले यो स्पष्ट गर्दछ कि क्वासरले विकिरण उत्सर्जन गरिरहेको छ जसले वरपरको ग्यासलाई अपेक्षाकृत न्यानो राख्छ । खगोलविद्हरूले कार्बन मोनोअक्साइड जस्ता अन्य अणुहरू पनि पत्ता लगाए । तिनीहरूको अनुमान छ कि ब्ल्याक होलमा यसको द्रव्यमान लगभग छ गुणाले बढाउन पर्याप्त ग्यास छ, यद्यपि परिणाम अनिश्चित छ । यस ग्यासमध्ये केही नयाँ ताराहरू बन्न सक्छ, जबकि अन्य भागहरू अन्तरिक्षमा भाग्न सक्छन् । जे भए पनि, यी अवलोकनहरूले प्रारम्भिक ब्रह्माण्डको अवस्थाको झलक दिन्छ ।

क्वासरहरू, पानी र जीवनको गठन

यस्तो टाढाको क्वासरमा पानीको वाष्पको पहिचानले जीवनको आवश्यक निर्माण ब्लकहरू समय र स्थानको विशाल विस्तारमा कसरी प्रकट हुन्छ भन्ने हाम्रो बुझाइलाई विस्तार गर्छ । पानी जीवनको लागि अत्यावश्यक छ जसलाई हामी जान्दछौं, र अरबौं वर्ष पहिले यसको उपस्थितिले जीवनको लागि आवश्यक तत्वहरू लामो समयदेखि उपलब्ध रहेको सुझाव दिन्छ । यसबाहेक, पानीले ताराहरू र आकाशगंगाहरूको विकासलाई आकार दिन महत्त्वपूर्ण भूमिका खेल्छ । जब ग्यास बादलहरू चिसो हुन्छन्, पानीले तिनीहरूको पतनलाई सुविधा दिन्छ, ताराहरूको जन्मलाई बढावा दिन्छ ।

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### महोत्सव मात्र महोत्सवको लागि नहोस् !

यही पुस १२, १३ र १४ गते ३ दिन मध्यपुर महोत्सव हुने भएको छ । आन्तरिक र बाह्य पर्यटकहरुको गन्तव्य बनाउन र स्थानीयको आय आर्जनमा टेवा पुऱ्याउने लक्ष्यसाथ हुन लागेको स्थानीय सरकार अर्थात नगरपालिकाको भनाई रहेको छ । मध्यपुर थिमिमा यस अघि ३ वटा महोत्सव सम्पन्न भइसकको छ। यो हुन लागेको महोत्सव चौथो पटक हो भने अन्य फेस्टिवलसमेत सम्पन्न भइसकेको छ । तर पर्यटनको गन्तव्य स्थल बनाउने नारा भने यही महोत्सवको बेला मात्र उठ्ने गरेको छ।

हुनतः मध्यपुर थिमि नगर प्राचीनतम नगरको रुपमा रहेको छ । यहाँ मुर्त तथा अमूर्त सम्पदाहरु थुप्रै छन् । यसका साथै यहाँ मल्लकालिन देवघर, मन्दिर, पाटी पौवा, पोखरी र ढुँङ्गेधाराहरु रहेको छ। जसको पुनः जीवनमा नगरपालिकाको ठूलै धनराशी तथा शक्ति खर्च भएको छ । यसकै कारण पनि नगरपालिका क्षेत्र विगतमा भन्दा हेर्न लायकको स्थानका रुपमा परिणत भएको सबै नगरवासीले अनुभव गरेको छ । तर नगर भित्र रहेको सामाजिक जीवनशैली र यहाँको मानववस्तीमा आधुनिकताले गर्दा पुराना परम्परागत मन्दिर, पाटी पौवा लगायतका सम्पदाहरु ओझेलमा पर्दै गएको भने स्वीकार्नु नै पर्दछ।

अहिले हामी युवाहरुमा केही रुपमा भएपनि आफ्नै मौलिक पहिचान खोज्ने उत्सुकता देखिएको छ। जसको कारण पनि विगतमा लोप भैसकेका र हुन लागेका सम्पदा जागाउनका लागि युवाहरुमा जागरण आइरहेको दखिन्छ। जुन हाम्रो विश्वमै स्थापित भएको नेवाः कला, संस्कृति र सामाजिक जीवनशैली हो । जुन समाजले पुर्खाको धरोहरका रूपमा केही संस्कार र केही सम्पदा पाएको छ।

नेपालमा विश्वलाई चिनाउने र आफ्नै मौलिक राष्ट्रिय मूर्त र अमूर्त सम्पदाहरु रहेका छन् । यही नेवाको सम्पदाबाटै विश्वले नेपाललाई चिन्ने गरेको छ। नेपालमा संसारकै सामु गर्व गर्न सक्ने अनगिन्ती सम्पदा छन् । काष्ठमण्डप अन्त कतै छैन । डातापोल मन्दिर । पाटनको ढुङ्गै ढुङ्गाबाट निर्मित कृष्ण मन्दिर, स्वयम्भू र बोद्धको चैत्य अनि काठमाडौं उपत्यकाका जात्राहरूको व्यवस्थापनको निरन्तरता सामुदायिक व्यवस्थापनको विश्वस्तरीय उदाहरण हो ।

सरकारले उत्पादक र अनुत्पादकको परि भाषामा पुनर्विचार गरोस् । सबै जातजातिका लोक संस्कृतिको संरक्षण र अभिलेखनमा सरकारले लगानी गर्नुपर्छ । सरकारमात्र होइन निजी क्षेत्र र सामाजिक संस्थाहरूले पनि यस्ता कामलाई विकास ठान्नुपर्छ । नमासिँदै नजोगाउने हो भने सधैंका लागि समाप्त हुन्छन् सम्पदाहरू । सन्तानका लागि पुर्खाले छाडेर गएका सम्पदा जोगाउनु नै आजको आवश्यकता हो। साथै यो चौथो पटकको महोत्सवको नारा विगतका महोत्सवको जस्तो नभएर सार्थक बन्न सकोस् । महोत्सव मात्र महोत्सवको लागि नभएर नगरवासीको आर्थिक जीवनसँग पनि जोडिने गरि सम्पन्न होस् भन्ने शुभकामना !

# नेपाललाई एआई हब बनाउने उपाय : अवसर, चुनौती र रणनीतिक कार्यान्वयन

● डा. राजन थपलिया

कृत्रिम बौद्धिकता(एआई) विश्वव्यापी रूपमा परिवर्तनकारी प्रविधि बनिसकेको छ,जसले उद्योगहरूको रूपान्तरण, शासनको सुधार गर्न र जीवनस्तरलाई माथि उठाउन सक्दछ । नेपालले सामाजिक, आर्थिक र भौगोलिक अवस्थासँगै, क्षेत्रीय 'एआई हब' बन्ने सम्भावना बोकेको छ । नेपाललाई एआई हबका रूपमा स्थापित गर्न डिजिटल पूर्वाधार, मानव पुंजीमा लगानी र सरोकारवालाबीच सहकार्य आवश्यक छ। 'फोर-जी' र 'फाइभ-जी' नेटवर्क विस्तार, काठमाडौँ, पोखरा र इटहरीजस्ता सहरहरूमा 'टेक पार्क' स्थापनालगायतका पहलहरूले यस प्रक्रियामा आधार शिलाको काम गर्न सक्छ ।

नेपालले मानव पुँजीमा लगानी गर्न, विद्यालय,कलेज र विश्वविद्यालयहरूमा एआई-केन्द्रित पाठ्यक्रमहरू सुरु गर्नुपर्ने हुन्छ। विश्वव्यापी संस्थाहरूसँग सहकार्य गर्दै तालिम कार्यक्रम,कार्यशाला र पाठ्यक्रमहरू प्रदान गरेर नेपाली युवाहरूको विशेषज्ञता अभिवृद्धि गर्न सकिन्छ। साथै, सरकारले कर छुट, अनुदान र एआई स्टार्टअपहरूका लागि प्रोत्साहन गर्ने नीतिहरू ल्याउँदा नवीनतालाई प्रोत्साहन दिन मद्दत पुग्नेछ । एआई आधारित उद्यमशीलता समर्थन गर्न इनक्युबेटर र एक्सेलेरेटरहरूको स्थापना गर्दा प्रतिभा र लगानीलाई आकर्षित गर्न सकिन्छ ।

नेपालले एआईको माध्यमबाट धेरै फाइदा लिन सक्छ । एआई-सक्षम उपकरणहरूले निदानको शुद्धतालाई सुधार गर्न र टेलि-मेडिसिन सेवाहरूलाई दुर्गम स्थानसम्म पुऱ्याउन सकिन्छ। एआईबाट सञ्चालित व्यक्तिगत शिक्षण प्लेटफर्महरूले ग्रामीण विद्यार्थीका लागि शिक्षामा भएका खाडलहरू पुर्न सकिन्छ । यसैगरी, व्यावसायिक खेती, मौसम पूर्वानुमान र कीराहरूको पहिचानजस्ता एआई अनुप्रयोगहरूले कृषि उत्पादकत्वलाई उल्लेखनीय रूपमा वृद्धि गर्न सक्छ । साथै, भूकम्प र बाढीजस्ता प्राकृतिक प्रकोपमा एआईको भूमिका धेरै महत्त्वपूर्ण छ। यसले समयमै उद्धार र स्रोतहरूको व्यवस्थापन गरेर क्षतिको न्यूनीकरण गर्न सकिन्छ ।

एआईको माध्यमबाट चुनौती र आवश्यकताहरू सम्बोधन गर्न सकिन्छ । एआई मोडेलहरूलाई नेपाल-विशिष्ट डेटा प्रशिक्षण दिएर यसको प्रासंगिकता सुनिश्चित गर्न सकिन्छ । उदाहरणका लागि, भाषण पहिचान उपकरणहरूले नेपाली र मैथिली, भोजपुरी, तामाङजस्ता क्षेत्रीय भाषाहरूलाई संवर्द्धन हुनसक्छ । एआईले पर्यटनमा भर्चुअल गाइड, च्याटबोट र एआर/भिआर अनुप्रयोगहरूमार्फत नेपालको सांस्कृतिक सम्पदालाई बढाउन सक्दछ भने वित्तीय क्षेत्रमा एआई/सक्षम क्रेडिट स्कोरिङ प्रणालीहरूले अन्डरसर्ड जनसङ्ख्यालाई ऋण विस्तार गर्न मद्दत गर्न सक्छ ।

एआईको लाभलाई अधिकतम बनाउन, नेपालले दक्ष कार्यान्वयन र निरन्तर नवप्रवर्तन सुनिश्चित गर्नुपर्छ । केन्द्रित डेटा भण्डार हरूको सिर्जना र डेटा गोपनीयता नियमहरूको कार्यान्वयन गर्नु यसका आधारभूत चरणहरू हुन् । छात्रवृत्ति, अनुदान र विश्वविद्यालयहरूसँग सहकार्य गरेर एआई अनुसन्धानलाई प्रोत्साहित गर्दा स्थायी विकासका लागि ज्ञानको आधार सिर्जना गर्न सकिन्छ । नागरिकहरूलाई एआईका फाइदाहरू र सीमाहरूको बारेमा शिक्षित गर्नाले स्वीकृति बढाउन र रोजगारी हराउने डर वा गोपनीयतासम्बन्धी चिन्ताहरूलाई कम गर्न सकिन्छ । एआई पहलहरूबाट नेपालको दिगोपन लक्ष्यहरूसँग मेल खाने कृषि र ऊर्जामा वातावरणमैत्री अभ्यासलाई प्रवर्द्धन हुनसक्छ ।

सरकारी कार्यालयहरूमा एआईलाई एकीकृत गर्दा दक्षता, पारदर्शिता र सेवा वितरणमा सुधार गर्न सकिन्छ । एआई-सक्षम इ-शासन समाधानहरूले रेकर्ड राख्ने जस्ता सामान्य प्रशासनिक कामहरू स्वचालित गर्न सक्छ, जसले प्रशासनिक अक्षमता कम गर्छ । नीतिहरूको प्रभाव मूल्याङ्कन गर्न र सुधारका सुझाव दिन ठूला डेटा सेटहरू मूल्याङ्कन गर्ने उपकरणहरूले तथ्यमा आधारित निर्णय-निर्माणलाई प्रोत्साहन गर्न सक्छ । त्यसैगरी, एआईले स्वास्थ्य, शिक्षा र पूर्वाधार परियोजनाहरूमा स्रोतको उपयोग गर्न सक्छ, जसले समान विकास सुनिश्चित गर्दछ । भ्रष्टाचार नियन्त्रण र प्रकोप व्यवस्थापनमा यसको भूमिका यस प्रविधिको उपयोगितालाई थप उजागर गर्छ ।

एआईलाई प्रभावकारी बनाउन बहु आयामिक दृष्टिकोण आवश्यक छ । नेपालले डेटा गोपनीयता, नैतिकता, पूर्वाधार र कोषजस्ता पक्षलाई सम्बोधन गर्ने व्यापक एआई नीति मस्यौदा गर्नुपर्छ । एआई अनुप्रयोगहरूमा स्थानीय अधिकारीहरूको तालिमले कार्यान्वयन सक्षम बनाउन सक्छ । सार्वजनिक-निजी साझेदारीहरूले प्रभावकारी परियोजनाहरूका लागि स्रोत र विशेषज्ञतालाई संकलन गर्न सक्छ । एआई समाधानहरूको डिजाइन र कार्यान्वयनमा समुदायको सहभागिताले उनीहरूको आवश्यकता र समस्याहरूको समाधान गर्न मद्दत पुऱ्याउँछ । नेपालको एआई पहललाई अन्तर ाष्ट्रिय मापदण्डहरूसँग मिलाउँदै सुसंगत र विश्वव्यापी सहकार्यलाई प्रोत्साहन गर्न सकिन्छ ।

एआईले नेपालको सामाजिक-आर्थिक परिदृश्यलाई रूपान्तरण गर्ने ठूलो सम्भावना राख्छ। पूर्वाधार, शिक्षा र नीति विकासमा रणनीतिक लगानी गरेर, नेपालले आफूलाई दक्षिण एसियामा एआई हबको रूपमा स्थापित गर्न सक्छ । नागरिकहरूका लागि स्वास्थ्य र शिक्षामा सुधारदेखि प्रभावकारी शासनसम्मका फाइदाहरू महत्त्वपूर्ण र टाढासम्म फैलिएका छन् । सरकार, निजी क्षेत्र र नागरिकहरूबाट एकीकृत प्रयासका साथ नेपालले एआईको शक्ति उपयोग गरेर समृद्ध र समान भविष्य निर्माण गर्न सक्छ ।

विश्वमा एआईको के-के नयाँ विकासहरू भइरहेका छन् ?

एआईको उल्लेखनीय प्रगतिले जीवन र व्यवसायमा ठूलो परिवर्तन ल्याइरहेको छ । एआईको नयाँ-नयाँ विकासले धेरै क्षेत्रमा सम्भावनाका ढोकाहरू खोलेको छ । जनरेटिव एआई जस्तैः च्याट जिपिटी, डल(इ र मिडजर्नी, मानव-जस्तै सामग्री सिर्जना गर्न सक्षम भएका छन् । यी प्रविधिहरूले टेक्स्ट, चित्र, संगीत, र भिडियो सिर्जना गर्न सक्षम प्रणालीहरू प्रदान गरेका छन् । यो सिर्जनात्मकता र नवाचारको क्षेत्रमा मात्र सीमित छैन यसको प्रभाव स्वास्थ्य सेवा, शिक्षा र व्यापारमा समेत व्यापक छ ।

एआई आधारित रोबोटिक्सले उत्पादनशीलता र दक्षतामा उल्लेखनीय वृद्धि गरेको छ । अहिले, स्वचालित सवारी साधन पनि एआईको महत्त्वपूर्ण विकास हो । टेस्ला, वेमो र अन्य कम्पनीहरूले एआई चालित गाडीहरू विकास गरिरहेका छन्, जसले यात्रालाई सहज, सुरक्षित र वातावरणमैत्री बनाउन मद्दत गरिरहेको छ ।

यस्तै, स्वास्थ्य सेवामा एआईले रोग निदान र उपचार योजना बनाउन महत्त्वपूर्ण भूमिका खेलिरहेको छ । एआई आधारित इमेज प्रोसेसिङ प्रणालीहरूले एमआर आई र सिटी स्क्यान जस्ता पर ीक्षणहरूको दूत र सटिक विश्लेषण सम्भव बनाएको छ । साथै, एआईले प्राकृतिक भाषा प्रशोधन (एनएलपी) जस्ता क्षेत्रहरूमा उल्लेखनीय प्रगति गरेको छ। यसले मानिस र कम्प्युटर बीचको संवादलाई अझ प्रभावकारी बनाएको छ । सिरी, एलेक्सा र गुगल ट्रान्सलेटजस्ता उपकरणहरू एनएलपीको मुख्य उदाहरण हुन् । यस्तो निरन्तर प्रगतिको प्रभावले हामीले सोच्न सक्ने भन्दा धेरै फाइदा पुऱ्याइरहेको छ र यसले भविष्यमा अझ धेरै परिवर्तन ल्याउने अपेक्षा गरिएको छ ।

एआईको भविष्य कस्तो हुनेछ?

एआईको भविष्य अत्यन्तै उज्यालो र रोमाञ्चक छ । यो प्रविधिले शिक्षा, स्वास्थ्य, कृषि, उद्योग, र व्यापारजस्ता क्षेत्रहरूलाई अझ प्रभावकारी बनाउँदैछ । निकट भविष्यमा, एआईले मानव श्रमको आवश्यकता कम गर्दै धेरै कामहरू स्वचालित गर्नेछ । यो प्रविधिले मानिसलाई दोहोरो कामबाट मुक्त गराउँदै सिर्जनात्मक र सोच्न आवश्यक पर्ने कार्यहरूमा ध्यान केन्द्रित गर्न सहयोग पुऱ्याउनेछ । सुपर-इन्टेलिजेन्सको विकास भविष्यमा एआईले मानव बुद्धिलाई पार गर्ने क्षमता राख्छ भन्ने भविष्यवाणी गरिन्छ । यस्तो सुपर-इन्टेलिजेन्सले जटिल समस्याहरू समाधान गर्न, जस्तै जलवायु परि वर्तनको समाधान खोज्न, जैविक अनुसन्धानमा क्रान्ति ल्याउन र नयाँ औषधिहरू विकास गर्न सक्नेछ ।

यस्तै, एआईको प्रयोगले वैज्ञानिक अनुसन्धानमा ठूलो परि वर्तन ल्याउनेछ । स्वास्थ्य सेवामा, एआईले व्यक्तिगत उपचार योजना तयार गर्न र दुरुस्त रोग निदान गर्न भूमिका खेल्नेछ। साथै, शिक्षा क्षेत्रमा, एआईले व्यक्तिगत शिक्षा प्रणाली विकास गर्न, योजनाहरू अनुकूलन गर्न र विद्यार्थीहरूको आवश्यकता अनुसार अध्ययन सामग्री प्रदान गर्न सहयोग पुऱ्याउनेछ। व्यापार क्षेत्रमा एआईले डाटा विश्लेषण, उपभोक्ता प्रवृत्ति पहिचान र बजार रणनीति निर्माण गर्न सहयोग गर्नेछ । यसले मानिस र प्रविधिको सहकार्यलाई अझ सुदृढ बनाउनेछ । मानिसको जीवनलाई अझ सहज र व्यवस्थित बनाउनेछ । यस्तो भविष्यले मानवीय जीवनलाई नयाँ उचाइमा पुऱ्याउनेछ ।

कसरी धेरैभन्दा धेरै उपयोग गर्न सक्छौं?

एआईको सही उपयोग गरेर नेपालीहरूले आफ्नो जीवनस्तर मा सुधार ल्याउन सक्नेछन् । नेपालजस्तो देशका लागि एआईले धेरै सम्भावना प्रदान गर्दछ । कृषि, शिक्षा, स्वास्थ्य, पर्यटन, र उद्योगजस्ता क्षेत्रहरूमा एआईको प्रभावकारी उपयोग गरेर देशलाई विकासको मार्गमा अगाडि बढाउन सकिन्छ । कृषि क्षेत्रमा एआई आधारित प्रणालीहरूले माटोको पर ीक्षण, बालीको अवस्था विश्लेषण र उत्पादन बढाउन मद्दत गर्न सक्छ । स्मार्ट कृषि प्रणालीले लागत घटाउन र उत्पादकत्व बढाउन सहयोग पुऱ्याउँछ भने शिक्षा क्षेत्रमा एआईले अनलाइन कक्षाहरू, भर्चुअल ट्यूटर, र व्यक्तिगत अध्ययन योजना तयार गर्न सकिन्छ । ग्रामीण क्षेत्रमा अनलाइन शिक्षालाई प्रभावकारी बनाउन, विद्यार्थीहरूलाई पहुँचयोग्य बनाउन र शिक्षाको गुणस्तर सुधार गर्न एआई प्रयोग गर्न सकिन्छ ।

स्वास्थ्य क्षेत्रमा, एआईले ग्रामीण भेगका मानिसहरूको लागि टेलिमेडिसिन सेवा उपलब्ध गर ाउन सहयोग गर्न सक्छ । यसले जनसङ्ख्याको ठूलो हिस्सालाई गुणस्तरीय स्वास्थ्य सेवा प्रदान गर्न सक्छ । पर्यटन क्षेत्रमा, एआईले भर्चुअल गाइड, भाषा अनुवाद र पर्यटकहरूको व्यक्तिगत आवश्यकताहरू बुझेर सेवा प्रदान गर्न सक्छ । यसले नेपालको पर्यटन क्षेत्रलाई विश्व बजारमा प्रतिस्पर्धी बनाउनेछ । यसरी, एआईको सही उपयोगले नेपालीको जीवन सुधार गर्न र देशलाई प्रगतिको मार्गमा अगाडि बढाउन मद्दत गर्नेछ ।

एआई कसरी सिक्न सक्छौं ?

एआई सिक्न धेरै स्रोतहरू उपलब्ध छन् । अहिलेको डिजिटल युगमा अनलाइन प्लेटफर्महरूले एआईमा पाठ्यक्रमहरू उपलब्ध गर ाइरहेका छन् । यी पाठ्यक्रमहरूले आधारभूतदेखि उन्नत स्तरसम्मको ज्ञान प्रदान गर्छन् । साथै, धेरै पाठ्यक्रमहरू निःशुल्क वा सस्तो शुल्कमा उपलब्ध छन् । यस्तै, पुस्तकहरू पनि एआई सिक्ने उत्कृष्ट स्रोत हुन् । प्रोजेक्ट-आधारित सिकाइ एआई सिक्नको लागि अर्को प्रभावकारी विधि हो । कुनै समस्या समाधान गर्न वा कुनै नयाँ प्रणाली निर्माण गर्न प्रोजेक्टमा संलग्न भएर सिकाइलाई व्यावहारिक बनाउन सकिन्छ । नेपालका विश्वविद्यालयहरूले पनि एआईसम्बन्धी कोर्सहरू शुरु गर्नुपर्छ, जसले विद्यार्थीहरूलाई विश्वस्तको ज्ञान र सीप प्रदान गर्नेछ । यसैगरी, स्वयंसेवाका माध्यमबाट एआईसम्बन्धी परि योजनामा संलग्न भएर सिकाइलाई सुदृढ गर्न सकिन्छ। एआई सिक्नका लागि भाषा, गणित, र कम्प्युटर विज्ञानको आधारभूत ज्ञान आवश्यक पर्छ, जसलाई स्थानीय तहदेखि उच्च शिक्षासम्म शिक्षण प्रणालीमा समावेश गर्न सकिन्छ ।

नेपालमा एआई व्यवसायको सम्भावना कस्तो छ ?

नेपालमा एआई व्यवसायको सम्भावना अत्यन्तै ठूलो छ। देशको प्राकृतिक स्रोतसाधन, जनशक्ति र स्थानीय समस्याहरूको समाधान गर्न एआई आधारित व्यवसायहरूको स्थापना गरेर देशलाई आर्थिक रूपमा सबल बनाउन सकिन्छ। ई-कमर्समा, एआईले ग्राहकहरूको रुचि र प्रवृत्ति बुझेर व्यक्तिगत सिफारिस प्रणाली तयार गर्न सहयोग गर्न सक्छ । यसले ग्राहक सेवामा सुधार ल्याउँदै व्यवसायलाई प्रतिस्पर्धी बनाउनेछ । वित्तीय क्षेत्रमा, एआईले धोखाधडी पत्ता लगाउने, ऋण जोखिमको मूल्यांकन गर्ने र वित्तीय विश्लेषणलाई सहज बनाउनेछ । स्वास्थ्य सेवामा एआई आधारित उपकरणहरूले ग्रामीण भेगमा गुणस्तरीय स्वास्थ्य सेवा पुऱ्याउन सहयोग पुऱ्याउनेछ ।

सूचना प्रविधि क्षेत्रमा एआईले सफ्टवेयर र एप्लिकेसनहरूको विकासलाई प्रवर्द्धन गर्नेछ । यस्तै, शिक्षा क्षेत्रमा, एआईले विद्यार्थीहरूको अध्ययन प्रक्रियालाई व्यक्तिगत बनाउन र शिक्षाको गुणस्तर सुधार गर्न योगदान पुऱ्याउनेछ । एआई व्यवसायले नेपालको आर्थिक विकासलाई तीव्र बनाउन, रोजगारी सिर्जना गर्न र अन्तर्राष्ट्रिय बजार मा नेपाली व्यवसायहरूको पहुँच विस्तार गर्न मद्दत गर्नेछ ।

यसलाई कसरी धेरैभन्दा धेरै उपयोगी बनाउन सकिन्छ ?

नेपालमा एआईको प्रयोगलाई प्रभावकारी बनाउन सरकारको भूमिका मुख्य छ । सरकारले एआई प्रविधिमा लगानी बढाउन र नीति निर्माण गर्नुपर्छ। सरकारी सेवाहरूमा एआई आधारित प्रणालीहरूको प्रयोगले सेवा प्रवाहलाई छिटो, पार दर्शी र प्रभावकारी बनाउनेछ । उदाहरणका लागि, सरकारी कागजातहरूको डिजिटलाइजेसन, ट्राफिक व्यवस्थापन प्रणाली र सर कारी सेवाको अनलाइन पहुँचजस्ता क्षेत्रमा एआईले ठूलो योगदान पुऱ्याउन सक्छ । गाउँ स्तरमा, एआई आधारित शिक्षादीक्षा र स्वास्थ्य सेवाहरू लागू गर्न सकेमा ग्रामीण क्षेत्रको जीवनस्तर सुधार हुनेछ । यसका लागि सरकारले ग्रामीण क्षेत्रमा इन्टरनेट पहुँच वृद्धि गर्न र एआईमा जनचेतना अभिवृद्धि गर्न कार्यक्रम सञ्चालन गर्नुपर्छ ।

स्थानीय समाधान र विश्वव्यापी प्रतिस्पर्धा

एआईले स्थानीय समस्याहरू समाधान गर्न र विश्वव्यापी प्रतिस्पर्धामा नेपालको स्थान सुदृढ गर्न सक्छ । उदाहरणका लागि, कृषि क्षेत्रमा एआईले बाली व्यवस्थापन, उत्पादन पूर्वानुमान, र रोग नियन्त्रणमा सहयोग पुऱ्याउन सक्छ । पर्यटन क्षेत्रमा, भर्चुअल गाइड र भाषा अनुवाद सेवाले विदेशी पर्यटकहरूको अनुभव सुधार्न सक्छ । फिनटेकमा एआईले वित्तीय प्रविधि सुधार गर्न र बैंकिङ प्रणालीलाई प्रभावकारी बनाउन सहयोग गर्न सक्छ ।

चुनौती र समाधान

आधारभूत पूर्वाधारको कमी, जनशक्तिको अभाव र नीतिगत अस्पष्टताका कारण नेपालमा एआई अपनाउन धेरै चुनौतीहरू छन् । सरकार, निजी क्षेत्र र शैक्षिक संस्थाहरूको सहकार्यबाट यी चुनौतीहरू समाधान गर्न सकिन्छ । विश्वविद्यालयहरूले एआईलाई पाठ्यक्रममा समावेश गर्नुपर्छ । सरकारी कार्यक्रमहरूले जनचेतना अभिवृद्धि गर्न र नयाँ व्यवसाय स्थापना गर्न प्रोत्साहन दिनुपर्छ ।

निजी क्षेत्रले एआई आधारित परियोजनाहरूमा लगानी गर्नुपर्छ । एआई संसारभर तीव्र गतिमा विकास भइरहेको छ र नेपालले यसलाई सही तबरले अपनाएमा ठूलो फाइदा लिन सक्छ । शिक्षादेखि स्वास्थ्यसम्म र ग्रामीण क्षेत्रदेखि सहरी क्षेत्रमा एआईको प्रयोग गरेर देशलाई डिजिटल युगमा अगाडि बढाउन सकिन्छ । हामीले स्थानीय समस्या समाधान गर्दै एआईको उपयोग गर्नुपर्छ र विश्वव्यापी प्रतिस्पर्धामा नेपाललाई मजबुत बनाउने लक्ष्य राख्नुपर्छ । एआईले नेपालीहरूको जीवन सुधार गर्न र देशलाई प्रगतिशील बनाउन ठूलो भूमिका खेल्न सक्छ ।

(लेखक कम्प्युटर विज्ञान र कृत्रिम बुद्धिमत्ताका प्राध्यापक तथा इञ्जिनियरिङ र प्रविधि विभागका विषय विज्ञ पनि हुन्)

इकागजबाट

त्रिम TIMES
वर्ष १८ अङ्क २१ २०८१ पुस १० गते बुधबार
25 Dec. 2024 Wednesday


# नेकपा केन्द्रीय नेताले लगाएको एकै रंगको कोट-पाइन्टको रहस्य



उजिर मगर

काठमाडौं । नेत्रविक्रम चन्द 'विप्लव'ले नेतृत्व गरिरहेको नेपाल कम्युनिस्ट पार्टीको बैठक कपिलवस्तुमा बस्यो । मंसिर २७ देखि बसेको बैठकको त्यति चर्चा थिएन, तर जब डेढ सय जना केन्द्रीय सदस्य एउटै पहिरन अर्थात् 'ड्रेसकोड'मा देखिए, त्यसपछि बैठकको चर्चा भयो छ । कपिलवस्तुको शिवराज नगर पालकि- ९ मा अवस्थित पार्टी मुख्यालयमा पुस ३ बाट केन्द्रीय प्रतिनिधिको बैठक पनि बस्दैछ ।

नेकपा (माओवादी) शान्ति प्रक्रियाको २ चरणको वार्तामा आउँदा वार्ता समितिका संयोजक र वार्ता टोलीका सदस्यहरू एउटै पहिरनमा देखिन्थे । पछि शान्ति प्रक्रियामा आएपछि 'हेडक्वार्टर'को कमान्ड गर्ने नेतृत्व तहका नेताहरूले नीलो रंगको कोटपाइन्ट लगाउँथे । शान्ति प्रक्रियामा प्रवेशपछि उनीहरूको जीवनशैलीमा व्यापक फेरबदल देखियो ।

माओवादी नेतृत्वले लगाएका कोटपाइन्ट र घडीलाई समेत लिएर बेलाबेला आलोचना हुने गरेको थियो । हेटौंडा एकताको सातौं महाधिवेशनसम्म आइपुग्दा नेकपा (माओवादी केन्द्र)का अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले आफूहरू सुकिलामुकिला भएको जनतालाई पाच्य नभएको बताएका थिए । त्यही पुरानो माओवादीबाट अलग्गिएका नेत्रविक्रम चन्द ' विप्लव'ले यसपटक नयाँ शैली अपनाए ।

उसो त अघिल्लो वैशाखमा सम्पन्न केन्द्रीय समिति बैठकले नामको पछाडि 'सी' लेखेर एकरूपता दिने निर्णय गरेको थियो । अहिले विप्लव नेतृत्वको नेकपाका नेता/कार्यकर्ताले आफ्नो नामपछि 'सी' लेखेर पहिचान खुलाउने गरेका छन् । अहिले एउटै ड्रेसकोडमा देखिएर नयाँपन दिन खोजेका छन् । एउटै ड्रेसकोडको चर्चा हुनुका पछाडि पार्टीले सञ्चालन गरेको गार्मेन्ट पनि कारणको रूपमा छ ।

त्यससँगै कालो कोटमा अंग्रेजी अल्फावेट 'सी' र कम्युनिस्ट पार्टीको हँसिया हथौडा अंकित लोगो पनि बैठकमा सार्वजनिक गरिएको छ । त्यसका साथै सेतो सर्टको गोजी छेउमा पनि नेपाली वर्णमालाअनुसार 'सी' लेखेर प्रिन्ट गरिएको छ ।

'आफ्नै गार्मेन्टमा सिलाइएको ड्रेसकोडमा रहेको दृष्य नौलो लाग्यो । हरेक पार्टीका आ-आफ्नै मौलिकता, नवीनता र उत्पादनकेन्द्रित प्रयोग तथा परीक्षण हुँदा बेग्लै प्रकारको प्रतिस्पर्धा सिर्जना हुँदो हो कि ?', एमाले पोलिटब्यूरो सदस्य तथा सांसद सूर्य थापाले आफ्नो फेसबूक भित्तामा लेखेका छन् । उनले सिक्न सकिने यस्ता उदाहरण र दृष्टान्तहरू अनेक हुन सक्ने औंल्याउँदै एकीकृत पूँजीकृत नीति अवलम्बन गरिनु उचित हुने बताएका छन् ।

विप्लव माओवादीलाई सरकारले प्रतिबन्धित गरेकै बेला काठमाडौंको मनमैंजुमा गार्मेन्ट सञ्चालन गरेको थियो । प्रतिबन्धित अवस्थामा कार्यकर्ताका लागि ट्र्याकसुट, ज्याकेट, ट्राउजर, झोलाहरू उत्पादन गर्दै आएको थियो । अहिले त्यसैलाई विकसित गरी पार्टी मुख्यालय कपिलवस्तुमै २५ जना दक्ष जनशक्तिसहित गार्मेन्ट सञ्चालनमा ल्याइएको छ । ट्र्याकसुट, ज्याकेटहरू अनाथ बालबालिका र वृद्धहरूलाई समेत वितरण गरिएको छ ।

गार्मेन्ट हेर्ने जिम्मा केन्द्रीय सदस्य 'संगम सी'ले लिएका छन् । अहिले केन्द्रीय समितिमा डेढ सय जनाले लगाएका कोटपाइन्ट र सर्ट प्रतिसेट ६ हजार रुपैयाँमा तयार भएको छ । कपडा बजारबाट संकलन गरिएको हो ।

कालो रंगको कोटपाइन्ट र सेतो सर्टमा इन्डियन र चाइनिज ब्रान्ड कपडाका परेका छन् । स्वदेशमै कपडा उत्पादन गरेर कसरी बजारीकरण गर्न सकिन्छ भनेर पछिल्लो बैठकमा एउटै ड्रेसकोड लगाएपछि छलफल समेत भएको छ । पुस ३ बाट शुरू हुने १ सय ३५ हाराहारीका केन्द्रीय प्रतिनिधिको बैठकमा पनि सहभागीहरू कालोकोट तथा सेतो सर्टमै उपस्थित हुने छन् ।

बैठकमा पार्टीको संगठनात्मक जीवन, नेता/कार्यकर्ताको दैनिक जीवन सञ्चालन, उत्पादनका कार्यहरूमा जुट्न 'नयाँ आर्थिक मार्ग'को कार्यक्रम तय गरिएको छ । नयाँ आर्थिक मार्गमा श्रम र उत्पादनका लागि केन्द्रीय नेतृत्वदेखि जिल्ला, सबै जनवर्गीय संगठनलाई उत्पादनमा जोड्ने निर्णय बैठकले गरेको छ ।

बैठकमा पेश गरिएको उत्पादनसम्बन्धी दस्तावेजमा भनिएको छ- 'समाजवादको आधारशिला तयार गर्नका लागि पुँजीको उत्पादन, निर्माण र विकास सत्ता प्राप्तिका लागि मात्रै होइन भन्ने पुष्टि हो यो । उत्पादन, विकास र निर्माण क्रान्तिभित्र पनि आत्मसाथ गरेर प्रयोगमा लिन सकिन्छ भन्ने उदाहरण पनि हो ।'

'युद्धकाल'मा सहकारी निर्माणको नेतृत्व पनि विप्लवले गरेका थिए । २०६३ को शान्ति प्रक्रियासम्म आइपुग्दा २० लाख रुपैयाँ पुगेको थियो । विप्लवले पछिल्लोपटक पनि देशभरी कार्यक्षेत्र भएको सहकारी सञ्चालन गरिरहेका छन्, जसको अनुभव लिनका लागि 'सहकारीको बचत रकम अपचलनसम्बन्धी संसदीय छानबिन विशेष समिति'को नेतृत्व गर्दा विप्लव माओवादीसँग राय मागेको थापाले उल्लेख गरेका छन् ।

देशभर अहिले पार्टीले तीन नेतालाई जिम्मा दिएर धान उत्पादन गर्दै आएको छ । मोरङमा 'सुमन सी', कैलालीमा 'प्रकाश सी' र चितवनमा पार्टी पोलिटब्यूरो सदस्य सन्देश पौडेलले जिम्मा पाएका छन् । सन्देशले नारायणकाजी श्रेष्ठ नेतृत्वको नेकपा (एकता केन्द्र)मा रहँदै चितवनमा 'बालग्राम कम्युन' सञ्चालन गरेका थिए । माओवादीसँग पार्टी एकतापछि सन्देश विप्लव माओवादीमा गएका थिए । बैठकमा रिपोर्ट गरिएअनुसार अहिले देशभरबाट २५ सय क्वीन्टल धान उत्पादन गरी संकलन गरिएको छ ।

कालो कोटपाइन्टको ड्रेसकोडको चर्चाबाट हौसिएको नेकपाले स्वदेशमै कपडा उत्पादन, छालाका जुत्ता तयारीका लागि विस्तृत योजना बनाउने छलफल गरेको छ । कपडा उत्पादनका लागि कच्चा पदार्थ उत्पादनमा जोड दिने र अन्य उद्योगीहरूसँग परामर्श गरी कपडा उत्पादनमा जोड दिने तयारी पार्टीले गरेको छ ।

नेकपा (माओवादी केन्द्र)सँग पार्टी एकता गर्ने विषयमा गत वैशाखकै निर्णयलाई निरन्तरता दिइएको छ । बरु पछिल्लोपटक प्रचण्डसँग पार्टी एकतासम्बन्धी कुनै छलफल वा वार्ता नभएको जानकारी विप्लवले बैठकमा गरएका छन् । बैठकले 'वृहत् वाम ध्रुवीकरण'का लागि नयाँ प्रस्ताव अघि सारेको छ, जसका लागि 'वामपन्थी, राष्ट्रवादी, देशभक्त र लोकतन्त्रवादी'बीच ध्रुवीकरणका लागि पहल लिने भनी प्रस्ताव पारित गरिएको छ । सशस्त्र गतिविधि गर्दा केही कार्यकर्ता, सर्वसाधारणसहितको जनधनको क्षति भयो । त्यसपछि २०७५ फागुन २८ गते विप्लव नेतृत्व नेकपालाई सरकारले प्रतिबन्ध लगाएको थियो ।

तत्कालीन नेकपाका तर्फबाट नेतृत्व गरेको केपी शर्मा ओली सरकारले नै प्रतिबन्ध लगाएको २ वर्षपछि २०७७ फागुन २० गते ३ बुँदे सम्झौतासहित प्रतिबन्ध फुकुवा गर्‍यो । त्यसपछि खुला राजनीतिक गतिविधि गरे पनि त्यस्तो हस्तक्षेपकारी राजनीतिक गतिविधि विप्लव नेतृत्वको नेकपाले अगाडि बढाउन सकेको छैन ।

नेकपा (माओवादी केन्द्र)का अध्यक्ष प्रचण्डले विप्लवसँग एकता गर्ने गरी पछिल्लो स्थायी समितिमा समेत छलफल चलाएका छन् । एकता प्रक्रियालाई अघि बढाउने सन्दर्भलाई जोडेर नेकपा (माओवादी केन्द्र)ले एकीकरण, समायोजन र नवप्रवेश हुँदा स्थापित वाम घटकहरूको जुन जिम्मेवारीमा थिए, सोही स्तरमा समायोजन हुने निर्णय गरेको छ ।

स्थानीय उपचुनावबाट हौसिएका प्रचण्डले माओवादी २०६४ मै पुग्न लागेको बताउँदै आएका छन्, जसका लागि 'जनयुद्धकालीन' सबै नेता/कार्यकर्तालाई पार्टीमा फर्कन आह्वान गरेका छन् । पार्टी बलियो बनाउने उद्देश्यसहित निवर्तमान उपराष्ट्रपति नन्दकिशोर पुन 'पासाङ'लाई सक्रिय राजनीतिमा फर्काउने तयारी पनि प्रचण्डले गरेका छन् । विप्लवको पछिल्लो बैठकले राजनीतिक निर्णयका कारण भन्दा पार्टीले सञ्चालन गरेको गार्मेन्टमा सिलाइएको कोटपाइन्ट र सर्टका कारण चर्चा पाएको छ । यदि माओवादीसँग विप्लवको एकता भइहालेमा २०६३ देखि सत्तामा रहँदै आएका सहकर्मीहरूसँग उनले लिएको उत्पादनको नीति कति मेल खान्छ, त्यो भने हेर्न बाँकी नै छ । लोकान्तर

## थाइल्याण्ड .

सुविधा दिने भनी विभिन्न प्रलोभनहरू देखाइ नेपालमा रहेका तथा वैदेशिक रोजगार र अध्ययनको सिलसिलामा युएईसहित अन्य मुलुकमा रहेका नेपालीलाई थाइल्याण्डको बैंकक, याहुनको अन्तर्राष्ट्रिय विमानस्थलमा अवतरण गराई विभिन्न माध्यमबाट म्यान्मारको कायिन प्रान्तको म्यावडीमा लगी जबर्जस्ती अवैध कार्यमा लगाइएको पाइएको भन्दै सो सम्बन्धमा विगतमा पनि सचेत गराइएको मन्त्रालयले सूचनामार्फत स्मरण गराएको छ । पछिल्ला दिनमा मानव बेचबिखन एवं अन्य आपराधिक गतिविधिमा संलग्न गिरोहले नेपाली नागरिकलाई कम्बोडिया, लाओस र म्यान्मारमा लगी जबर्जस्ती अवैध कार्यमा लगाउने गरेको सूचना प्राप्त भएको मन्त्रालयले जनाएको छ । यस्तै, रोजगारदाताले राहदानी खोसिदिने, १२/१३ घण्टासम्म काममा लगाउने, चरम यातना दिने, तलब नदिनेलगायत समस्या रहेको सूचनाहरू आएको जानकारी गराउँदै उद्धारका लागि नेपाली राजदूतावास याहुन र बैंककमा आवेदन गर्ने नेपालीको सङ्ख्यामा उल्लेखनीय रूपमा वृद्धि भइरहेको घटनाप्रति गम्भीर ध्यानाकर्षण भएको परराष्ट्र मन्त्रालयले जनाएको छ ।

वैदेशिक रोजगारीमा लगाइदिने वा यस्तै प्रकृतिका अन्य प्रलोभनमा पारी ठूलो रकम लिने जोसुकै व्यक्तिलाई विदेशमा पुर्‍याई अलपत्र पार्ने, नेपाल सरकारको प्रचलित कानुनबमोजिम निषेध गरिएका कार्यमा संलग्न हुने वा यस किसिमले क्रियाकलाप गर्ने/गराउने कार्य कानुनबमोजिम दण्डनीय भएकाले यस्ता गैरकानुनी कार्य नगर्न/नगराउन र यसतर्फ सचेत रहन सम्बन्धित सबैमा परराष्ट्र मन्त्रालयले अनुरोध छ । रोजगारीका अवसरको प्रलोभन देखाई युवालाई ठगी गरिरहेको र पीडितलाई गैरकानुनी रूपमा बैंकक हुँदै कम्बोडिया, लाओस र म्यान्मात्याई बन्दी बनाएर काम गर्न लगाएको पाइएको तथा सामाजिक सञ्जालहरूमार्फत विभिन्न स्थानका एजेन्टद्वारा प्रस्तावित हुने भएकाले त्यस्ता सामाजिक सञ्जालमा प्रचार गरिएका नक्कली रोजगारीको प्रलोभनमा नपर्नसमेत आग्रह गरिएको छ ।

'वैदेशिक रोजगारमा जाने प्रयोजनका लागि भिजिट भिसामा यात्रा नगर्न हुन र रोजगारीको प्रस्ताव स्वीकार गर्नु अघि विदेशस्थित सम्बन्धित नेपाली नियोगमार्फत विदेशी फर्म, कम्पनी र रोजगारदाताका बारेमा पर्याप्त जानकारी लिन तथा व्यक्तिगत रूपमा ती फर्म, कम्पनी र रोजगारदाताको वेबसाइट जाँच गर्नुहुन अनुरोध गरिन्छ, सूचनामा भनिएको छ ।

# चिसो मौसममा उच्च रक्तचापको जोखिम !

काठमाडौं । हिउँद चिसो मौसम हो । यो मौसममा स्वास्थ्यसम्बन्धी विभिन्न समस्या देखिने गर्दछन् । पछिल्लो समये खानपान र आधुनिक जीवनशैलीका कारण मुटुरोगीको संख्या युवावस्थामै बढ्दो छ । चिसो मौसममा शरीरका नसा साँघुरिन्छन् । जसका कारण मुटुलाई भार पर्छ र उच्च रक्तचाप र हृदयघातको समस्या धेरै देखिने चिकित्सक बताउँछन् । पहिलेदेखि नै मुटुसम्बन्धी समस्या भएका, मोटोपन भएका, मधुमेह, कोलेष्ट्रोललगायत दीर्घरोगी र बालबालिका तथा बृद्धबृद्धामा मुटुरोगको धेरै जोखिम हुने भएकाले खानपान लगायतका कुरामा ध्यान दिन चिकित्सकको सुझाव छ । चिसो मौसम मुटुरोगीका लागि किन जोखिमपूर्ण हुन्छ ? कस्ता व्यक्तिमा मुटुरोगको जोखिम धेरै हुन्छ ? मुटुमा समस्या हुँदा कसरी थाहा पाउने ? मुटुमा समस्या हुँदा लक्षण कस्ता देखिन्छन् ? बच्चाका लागि के गर्ने ? यिनै विषयमा ह्याम्स अस्पतालमा कार्यरत मुटुरोग विशेषज्ञ डा. मुकुन्द शर्माको भनाई

चिसो मौसम मुटुरोगीका लागि किन जोखिमपूर्ण हुन्छ ?

हाम्रो शरीरमा भएका नसा गर्मी महिनाको तुलनामा चिसो मौसममा साँघुरिन्छन् । पहिले नै मुटुसम्बन्धी रोग भएर औषधी खाइरहेका बिरामी र जोखिममा रहेका व्यक्तिमा चिसो मौसममा यो रोगले बढी च्याप्ने गर्दछ ।

जस्तै उच्च रक्तचापको औषधी खाइरहेका बिरामीमा नसा च्यापिएर झन् रक्तचाप बढ्ने, खाइरहेको औषधीको मात्रा नपुग्ने, मुटुको धमनी सानो भएका मानिसमा चिसो मौसममा झन् साँघुरीने, ब्रेन स्ट्रोक हुने, मस्तिष्कमा रक्तश्राव हुने लगायतका समस्या देखिने गर्दछन् । यी सबै समस्या नसा खुम्चिएरै हुने गरेको पाइन्छ ।

कस्ता व्यक्तिमा मुटुरोगको जोखिम धेरै हुन्छ ?

कुनै पनि व्यक्तिको व्यक्तिगत आनीबानी जस्तै खानपान धुम्रपान तथा मद्यपान गर्ने व्यक्तिमा यसको जोखिम धेरै हुन्छ । वर्तमान परिवेशमा ठुलो जमातमा युवा सानै उमेरदेखि मद्यपान तथा धुम्रपानको लतमा छन् । यो एउटा जोखिमको मुख्य कारक मानिएको छ । उमेर बढ्दै जाँदा उच्च रक्तचापको सम्भावना बढेर जान्छ । अर्को वंशाणुगत कारण जस्तै अघिल्लो पुस्तामा कसैलाई मुटुरोग छ भने पछिल्लो पुस्तामा पनि यसको जोखिम रहन्छ । त्यस्तै सुगर (मधुमेह), प्रेसर (उच्च रक्तचाप), कोलेस्ट्रोल, मोटोपन भएका व्यक्ति तथा शारीरिक क्रियाकलाप कम गर्ने र खानपानमा ध्यान नदिने व्यक्तिमा मुटुरोगको जोखिम धेरै हुने गर्दछ ।

मुटु रोगीको दुई समूह हुन्छ । आफैले मेहनत गरेर आफ्नो हातमा भएकाको समूह एउटा हुन्छ र अर्को केही गर्न नसक्ने समूह हुन्छ । जस्तै आफूले गर्नसक्ने भनेको व्यक्तिगत आनीबानी खानपानमा ध्यान दिने, नियमित शारीरिक क्रियाकलाप गर्ने, तौल घटाउने, रक्तचाप नियन्त्रणमा राख्नेलगायतका कुरामा ध्यान दियो भने आधाभन्दा धेरै जोखिम घटाउन सकिन्छ । वंशाणुगत कारण लाग्ने मुटुरोगको जोखिम घटाउने कुरा आफ्नो हातमा हुँदैन । यस्तो अवस्थामा औषधी खाएर सुगर प्रेसर छ भने नियन्त्रणमा राख्ने, खानपानमा ध्यान दिनुपर्ने हुन्छ । यस्ता बिरामीले चिकित्सकको सल्लाह अनुसार आफ्नो जीवनशैली परिवर्तन गर्नुपर्छ ।

चिसो मौसममा रक्तचाप बढ्नुको मुख्य कारण के हो ?

यसको मुख्य कारण भनेको नसा खुम्चिनु नै हो । हाम्रो शरीरका नसा खुम्चिदा मुटुलाई धेरै भारपर्छ र रक्तचाप बढ्छ । त्यस्तै चिसो मौसममा खानपान धेरै हुने र शारीरिक क्रियाकलाप कम हुने भएकाले चिसो मौसममा रक्तचाप बढ्छ । त्यसैले अस्पतालमा पनि गर्मी महिनामा भन्दा जाडो महिनामा उच्च रक्तचापका बिरामी धेरै आउने गर्दछन् ।

जाडोमा मुटुरोगको जोखिम कुन उमेरमा बढी हुने गर्दछ ?

हाम्रो शरीरको तापक्रम ३५ डिग्री सेल्सियस अथवा ९५ डिग्री फरेनहाइट भन्दा तल भयो भने हाम्रो शरीरमा जुन इनर्जी प्राप्त हुन्छ त्यसले हामीलाई आवश्यक पर्ने सेलहरु बनाउन सक्दैन । त्यसैले कम्तिमा पनि हाम्रो शरीरको तापक्रममा ख्याल गर्नुपर्छ । यो भन्दा कम भएपछि शरीरले आफूलाई चाहिने इनर्जी लिन सक्दैन जसको जोखिममा बालबालिका र वृद्धवृद्धा पर्ने गर्दछन् । यस्तो अवस्थामा बिरामीको मृत्यु हुनसक्ने सम्भावना हुन्छ ।

चिसोले कठ्यांग्रिएर बालबालिका तथा वृद्धवृद्धाको मृत्यु भएका घटना हामीले चिसो मौसममा प्राय सुन्ने गर्दछौं । यसको कारण भनेको चिसोका कारण शरीरको तापक्रम कम हुँदै जाँदा शरीरका अन्य अंग जस्तै मस्तिष्कका सेल पनि मर्दै जान्छन् र सोच्ने शक्ति हुँदैन मुटुका सेल मर्छन् । त्यसैले बिरामीको मृत्यु हुने गर्दछ ।

मुटुमा समस्या हुँदा कसरी थाहा पाउने ? लक्षण कस्ता देखिन्छन् ?

मुटुमा विभिन्न प्रकारका समस्या हुनसक्छन् । त्यसमध्ये पहिलो समस्या उच्च रक्तचाप हो । उच्च रक्तचाप हुँदा टाउको दुख्ने, रिंगटा लाग्ने जस्ता लक्षण धेरैलाई देखिए पनि कतिपय बिरामीलाई नदेखिन सक्छ । त्यस्ता बिरामीलाई जोखिम अझ धेरै हुन्छ । त्यसैले उमेर बढ्दै जाँदा वा आफ्नो खानपान तथा जीवनशैली कस्तो छ त्यो अनुसार र घरमा कोही उच्च रक्तचापको बिरामी हुनुहुन्छ भने त्यस्ता व्यक्ति यसको जोखिममा धेरै हुन्छन् । त्यसैले रक्तचाप बेला बेलामा जाँच गर्नु आवश्यक हुन्छ ।

हृदयघात हुनुभन्दा पहिले केही सामान्य लक्षण देखिन सक्छन् । जस्तै छाती भारी हुने, दुख्ने समस्या देखियो भने ढिलो नगरी अस्पताल जानु राम्रो हुन्छ । हृदयघात नै भइसकेको छ भने छाती दुख्ने, पसिना आउने, बेहोस हुने जस्ता लक्षण देखिन्छन् ।

पछिल्लो समय उच्च रक्तचापकै कारण धेरैले मिर्गौला गुमाएको पाइन्छ यसको जोखिम पनि चिसो मौसममा धेरै हुने हो ?

उच्च रक्तचाप आफैमा एउटा रोग नभई यसले अन्य रोगको जोखिम बढाउने काम गर्दछ । मिर्गौला मात्रै नभएर यसले हाम्रो शरीरमा भएका महत्वपूर्ण अंगमा क्षति पुर्याउँछ । हामीलाई सामान्य लाग्ने माथीको प्रेसर १४० र तलको ९० मात्रै हुँदा पनि विस्तारै मिर्गौला बिगार्छ । त्यो भन्दा धेरै भयो भने अझ छिटो बिगार्छ ।

त्यस्तै मुटुको मासु बाक्लो भएर मुटुको कोठा सुन्निदै जाने, मस्तिस्कको नसाहरु फुटेर प्यारालाइसिस हुने, जस्ता समस्या निम्त्याउँछ । त्यसैले रक्तचापमाथिको ११० र तलको ७० देखि १२०/८० सम्म राख्नुपर्छ ।

हृदयघात भएरै इमर्जेन्सीमा आउने बिरामीको संख्या पनि चिसो मौसममा धेरै हुने गरेको छ भने उच्च रक्तचापकै कारण प्यारालाइसिस भएका बिरामी पनि अस्पताल आउने गरेका छन् । नेपालमा मात्रै नभएर विश्वभर नै चिसो मौसम मुटुका बिरामीका लागि धेरै नै जोखिमपूर्ण मानिन्छ ।

उच्च रक्तचाप जस्तै चिसो मौसममा न्युन रक्तचाप पनि हुने हो ?

हाम्रो शरीरको तापक्रम ३५ डिग्री सेल्सियस अथवा ९५ डिग्री फरेनहाईट भन्दा तल भएको अवस्थालाई न्युन रक्तचाप मानिन्छ। उच्च रक्तचापले हृदयघातको जोखिम बढाएजस्तै न्युन रक्तचापले मिर्गौलामा क्षति पुर्याउने सम्भावना हुन्छ। त्यस्तै मुटुलाई चाहिने शक्ति नमिलेपछि हाम्रो शरीरलाई चाहिने रगत नपुगेर सबै अंगमा एकैपटक क्षति पुर्याउँछ। तर उच्च रक्तचापमा जति जोखिम न्युन रक्तचापमा हुँदैन। चिसोकै कारण रक्तचाप कम भएमा शरीरलाई न्यानो बनाएर राख्ने, तातो झोलिलो खानेकुरा खान दिने लगायतका कुरामा ध्यान दिनुपर्छ ।

# फुटबलमा मात्र रमाउने केटोको कथा



मनोज घिमिरे

काठमाडौं । रियल म्याड्रिडका लागि खेल्ने ब्राजिलियन सुपर स्टार भिनिसियस जुनियरले २४ घण्टा नबित्दै दुई वटा खुसी पाए । मङ्गलबारको रात उनी फिफाका वर्षको उत्कृष्ट पुरुष खेलाडी घोषित भए । रियल म्याड्रिडलाई ला लिगा, युइएफए च्याम्पियन्स लिग तथा सुपर कोपा डे स्पानामा सफलता दिलाएका कारण उनले सो उपाधि पाएका हुन् । त्यसकारण २४ घण्टा पुरा नहुँदै रियल म्याड्रिड पाचुवालाई हराउँदै इन्टर कन्टिनेन्टल कप फुटबलको उपाधि जित्न सफल भयो ।

फिफा क्लब विश्वकपको परिमार्जित संस्करणमा टोलीले उपाधि जित्दा जुनियर शीर्ष गोलकर्ता र उत्कृष्ट खेलाडी दुवै भए । फाइनलमा उनले पेनाल्टीमार्फत् एक गोल गरे । विश्व फुटबलर पछिल्लो एक दशक क्रिस्टियानो रोनाल्डो र लियोनल मेसीको सेरोफेरोमा घुमको साँचो हो । उनीहरूको प्रभाव कम भएको समयमा समेत ब्राजिलियनले आफूलाई संसारको शीर्ष खेलाडी पुष्टि गर्न कठिन भइरहेको समयमा जुनियर को यो सफलता ब्राजिलियन फुटबलका लागि समेत केही खुसी हुने विषय हो ।

जुनियरको जीवन नै आफैमा धैर्यताको प्रतीक हो । उनको बाल्यकालदेखिको कथा जान्नेहरूको लागि त्यसै धैर्यता र सङ्घर्ष नै अहिले उनी हरेक समयमा मैदानमा उपस्थित हुन पाउँदा खुसी हुनुको कारण बनेको छ । रियो द जेनरियो महानगरमा रहेको साओ गानकालोदेखि विश्वको उत्कृष्ट खेलाडी घोषित हुँदासम्मको क्षणमा धेरै दुःख, कष्ट र सङ्घर्ष र धैर्यताको कथा जोडिएका छन् । तर यी यावत परिवर्तनका माझमा उनको त्यो मुस्कान भने सदाबहार उस्तै छ ।

उनका पूर्व प्रशिक्षकका अनुसार आठ वा नौ वर्षको उमेरदेखि नै विशेष केही थियो । सन् २०१० देखि २०१८ को बिचमा फ्लेमिङ्गोको यूथ परियोजनामा निर्देशक रहेका कार्लोस नाभाल भन्छन्, 'भिनिसियसमा कति असाधारण क्षमता छ भनेर हामी त्यस समयमा कल्पना गर्न सक्ने अवस्थामा थिएनौं ।'

ब्राजिलियन फुटबलमा १० वर्षको उमेर मा नै उनलाई देख्ने र हेर्नेहरू भविष्यको एउटा सुपर स्टारको कल्पना गर्न थालिसकेका थिए । उनको व्यक्तित्व, उनको लगन, प्रकृति प्रदत्त क्षमता र समर्पण सबै आजको सफलताका आधार थिए । १० वर्षको उमेरमा फ्लेमिङ्गो प्रशिक्षण केन्द्रमा आबद्ध भएका उनले प्रशिक्षणका लागि दैनिक ५० किलोमिटरको यात्रा गरेर प्रशिक्षण गर्ने गरेका थिए ।

पछि क्लबका प्रशिक्षक युलिसेले उनलाई आफ्नै घरमा राखेका थिए । घर र प्रशिक्षण केन्द्र बिचको लामो दुरीका कारण उनलाई जगिड गर्ने समय मिलेको थिएन । यस कारण उनले सो निर्णय गरेका थिए । सन् २०१७ मा उसको जीवनमा कायापलट नै भयो । सोही वर्ष भएको यु-१७ दक्षिण अमेरि की च्याम्पियनसिपमा उनी आफ्नो देशलाई उपाधि दिलाउन मात्र सफल भएनन् शीर्ष गोलकर्ता र उत्कृष्ट खेलाडीसमेत घोषित भए । यसपछि नै संसारका फुटबल शक्तिहरू उनीप्रति आकर्षित भएका थिए ।

संसारका महाशक्ति उनीप्रति आकर्षित भए पनि उनी फ्लेमिङगोबाट रियल म्याड्रिडमा पुगेका थिए । रियलमै उनले थुरै समयमा महत्वपूर्ण सफलता पाए । उनको उपस्थिति र योगदानमा रियलले फिफा क्लब विश्वकप, तीन पटक स्पेनिस ला लिगा तथा दुई पटक युरोपेली च्याम्पियन्स लिग जिती सकेको छ ।

बाल्यकालका प्रशिक्षक नाभालकै सामु भने भिनिसियस बारे सम्झने धेरै कुरा छन् । बाल्यकालका उनका प्रशिक्षक युलिसेयसकै विचारमा जुनियर जसरी बिहान ६ बजे बस चढेर फ्लेमिङगोको क्लबमा प्रशिक्षणका लागि जान्थे अहिले रियल म्याड्रिडका सुपर स्टार भइरहँदा पनि त्यस्तै देखिन्छन् । उनको खुसीको कारण त्यस समयमा पनि फुटबलमा थियो र अहिले पनि फुटबलमा छ ।

जुनियर बाल्यकालमा यु-१५ कोपा भान्डोरान्टिम जित्न सफल भएका थिए । त्यसपछि उनको खुसीयाली मनाएको दृश्यले सबैलाई चकित पारेको थियो । फुटबलमा त्यो केज र पागलपनले सबैलाई आश्चर्यमा पारेको थियो । सन् २०१६ मा रियो द जेनरियो यु-१६ च्याम्पियनसिपमा भास्को डिगामासँग फाइनल खेलको पहिलो लेग भएको थियो । सोही खेलमा उनले केही कला देखाए । भास्कोडिगामा ४-० ले पराजित भयो । त्यो यस्तो खेल थियो कि क्लबका प्रशिक्षक नै जुनियरको स्किलबाट अचम्मित थिए । आफ्नो टोली हारेको पीडा उनीहरूमा थिएन । जुनियरको केही स्किल हेरेर सबै जना मुग्ध भइरहेका थिए ।

पहिलो लेगमा एक गोल गरेका उनले दोस्रो लेगमा दुई गोल गरे । समग्रमा उनको टोली ६-१ ले विजयी भयो । उनले एक गोल त सिधै कर्नरबाट गरेका थिए । यो सफलता र आजको उचाइको राज खेल प्रतिको मोह र समर्पण मात्र होइन, उनको व्यक्तिगत खेल चरित्र पनि हो । उनी जत्ति पटक गोल गर्न चुके पनि निराश हुँदैनन् । खेलमा रमाइरहेका हुन्छन् र बारम्बार गोलकै प्रयास गर्छन् । बाल्यकालका ब्राजिलियन प्रशिक्षकका लागि अहिलेका सुपर स्टार जुनियर तीनै जुनियर हुन् जो केटाकेटीमा थिए । बस फुटबलमा र माउन जन्मिएको एउटा केटा ।

महिलातर्फ बानमती

स्पेनकी स्टार खेलाडी आइताना बोनमाती महिलातर्फको स्टार खेलाडी भइन् । एक पटक भन्दा सो अवार्ड पाउने उनी छैटौं खेलाडी समेत भइन् । उनले स्पेनलाई नेसन कप दिलाउनुका साथै बार्सिलोनालाई च्याम्पियन्स लिग उपाधि दिलाएकी थिइन् ।

पुस्कास अवार्ड गारान्चोलाई

यस वर्षको पुस्कार अवार्ड अलेजान्ड्रो गारान्डोले जिते । एटरनटनविरुद्धको खेलमा गरेको ओभर हेड गोलको लागि म्यानचेस्टर युनाइटेडका फरवार्डलाई सो अवार्ड प्रदान गरिएको हो ।

हायस र एन्सेलोटी उत्कृष्ट

महिलातर्फ एमा हायास उत्कृष्ट प्रशिक्षक भइन् । उनले चेल्सीलाई सातौं पटक डब्लुएसएल उपाधि दिलाएकी थिइन् भने अमेरिकालाई पेरिस ओलम्पिकमा स्वर्ण पदक दिलाएकी थिइन् ।

पुरुषतर्फ रियल म्याड्रिडका कार्लोस एन्सेलोटी उत्कृष्ट भए । उनले जाभी अलान्सो, लुइस ला डे फुन्टे, पेप गुआर्डीओला, लियोनेल स्कोलानीलाई प्रतिस्पर्धामा पछि पारेका थिए । मतदानमा उनले २६ अङ्क भए भने अलान्सोले २२, फियुन्टेले ११, गुआर्डीओलाले १० तथा स्कोलानीले ४ अङ्क पाए ।

लिजेन्ड अवार्ड

महिला लिजेन्ड अवार्ड पहिलो पटक ब्राजिलकी मार्टालाई प्रदान गरियो । पेरिस ओलम्पिक पछि ३८ वर्षको उमेरमा उनले सन्यास घोषणा गरेकी हुन् । १९ अन्तर्राष्ट्रिय गोल गरेकी उनले सोही ओलम्पिकमा दुई गोल गरेकी थिइन् ।

अन्य अवार्ड

इन्टरमिलानका थिएगो माइयाले फेयर प्ले अवार्ड पाए । फरक जेनेटिक अवस्था भएकी भास्कोडिगामाकी गुलरेमो डे कान्डालाई उत्कृष्ट सपोर्टर अवार्ड प्रदान गरि एको थियो । अस्टन भिल्ला तथा अर्जेन्टिनाका एमिलियानो मार्टिनेज उत्कृष्ट पुरुष गोलरक्षक भए । अमेरिकालाई पेरिस ओलम्पिकको स्वर्ण पदक दिलाउने एलोसा नोयर महिलातर्फ उत्कृष्ट गोल रक्षक भइन् ।

स्रोत: फिफा र गोलडटकम

# बिजुली केतली प्रयोग गर्न अघि जान्नुहोस यी टिप्सहरू

एजेन्सी । जाडो मौसम सुरु भए लगतै मानिसहरूले आफ्नो सुविधा अनुसार सबै प्रकारका इलेक्ट्रोनिक वस्तुहरू प्रयोग गर्न थालेका छन् । गीजर, रुम हिटर, ब्लोअर, पानी तताउने रड, चिया बनाउने मेसिन, पीठो गुड्ने मेसिन आदि । पानी तताउन विद्युतीय केतलीको प्रयोग पनि बढ्दै गएको छ । कतिपयले जाडोभरि मनतातो पानी मात्र पिउने गर्छन् । यद्यपि, केही मानिसहरूले यसलाई प्रयोग पछि छोड्छन् । यसो गर्नु खतरनाक हुन सक्छ । कतिपय केतलीहरू यस्ता हुन्छन्, जसमा पानी हालेर छाड्दा स्वतः अन र अफ हुन्छन् । यसलाई निरन्तर छाड्दा आगो पनि लाग्न सक्छ । कहिलेकाहीँ यसबाट दुर्गन्ध पनि आउन थाल्छ । यस्तो अवस्थामा, तपाईले यसलाई प्रयोग गर्ने र सफा गर्ने सही तरिका जान्नु आवश्यक छ ।

इलेक्ट्रिक केतली कसरी प्रयोग गर्ने ?

१. यदि तपाईले पानी तताउनको लागि विद्युतीय केतली प्रयोग गर्नुहुन्छ भने, त्यसको प्रयोग गरेपछि यसको बटन बन्द गर्नुहोस् । जब पानी तातो हुन्छ, यसलाई गिलास वा कपमा बिस्तारै निकाल्नुहोस् ।

२. धेरै पटक पानीलाई लगातार तताउँदा भित्रबाट अनौठो गन्ध आउन थाल्छ । कालो धब्बा पनि देखिन्छन् । समय-समयमा सफा गरिएन भने भित्र पूरै कालो हुन सक्छ ।

३. यदि केतली गन्ध वा कालो भएको छ भने, यसलाई सफा गर्न, पहिले पानीले आधा भर्नुहोस् । अब एउटा कागती निचोर्नुहोस् र यसको रस हाल्नुहोस् । अब स्विच अन गर्नुहोस् र पानीलाई १-२ मिनेटको लागि उमाल्नुहोस् । अब यसलाई ब्रशको मद्दतले सफा गर्नुहोस् । केतलीलाई पानीले धुनुहोस् र केही बेर छोड्नुहोस् । तुरुन्तै प्रयोग नगर्नुहोस् ।

४. केतलीमा पानी हाल्नुहोस् र त्यसमा १-२ चम्चा भिनेगर हाल्नुहोस् । अब पानी खोल्नुहोस् र उमाल्न दिनुहोस् । जब यो उम्लिन्छ, यसलाई बन्द गर्नुहोस् र यसलाई १५ मिनेटको लागि यसै रहन दिनुहोस् । अब सफा पानीले केतली धुनुहोस् । सरसफाई सँगै दुर्गन्ध पनि हट्छ ।

५. के तपाईलाई थाहा छ तपाईले आफ्नो बिजुलीको पानी केतली प्याजको बोक्राले पनि सफा गर्न सक्नुहुन्छ ? यसका



लागि बोक्रालाई घाममा सुकाउने । यसलाई जलाएर खरानी जस्तै बनाउनुहोस् । अब यसलाई एउटा कचौरामा राख्नुहोस्, एक चम्चा डिश साबुन, १ चम्चा भिनेगर मिक्स गर्नुहोस् । अब यो पेस्टलाई केतली भित्र र खन्नुहोस् र बोतल सफा गर्ने ब्रशको मद्दतले र गड्नुहोस् । त्यसपछि सफा पानीले दुई पटक धुनुहोस् । तपाईको केतली चम्किनेछ ।

६. तपाई बेकिंग सोडा प्रयोग गरेर केतली पनि सफा गर्न सक्नुहुन्छ ।

# फिफा विश्वकप-२०३० को आयोजना छ देशमा हुने

काठमाडौं । विश्व फुटबलको सर्वोच्च निकाय फिफाको आयोजनामा विश्वकप-२०३० छ देशमा हुने भएको छ । फिफा कंग्रेसले विश्वकपको यो संस्करण आयोजना अधिकार युरोपका दुई देश स्पेन र पोर्चुगलसँगै अफ्रिकी मुलुक मोरोक्कोलाई सुम्पिने निर्णय गरेको छ ।

तर, सन् २०३० मा विश्वकप आयोजना सुरु भएको १००औं वर्ष पुग्ने भएकाले उक्त संस्करणका सुरुआती तीन खेल तीन फरक दक्षिण अमेरिकी मुलुकले आयोजना गर्ने फिफाले जनाएको छ । त्यस अनुसार उक्त संस्करणका सुरुआती तीन खेल उरुग्वे, अर्जेन्टिना र पर ग्वेमा हुनेछ ।

फिफाका अनुसार प्रतियोगिताको उद्घाटन खेल उरुग्वेको र जधानी मन्टेभिडियोमा हुनेछ । दोस्रो खेल अर्जेन्टिना र तेस्रो खेल पर ग्वेमा हुनेछ । यसपछिका बाँकी सबै खेल स्पेन, पोर्चुगल र मोरोक्कोमा सञ्चालन हुनेछ । फिफा विश्वकपको पहिलो संस्करण सन् १९३० मा उरुग्वेको मन्टेभिडियोमा भएको थियो ।

यस्तै, फिफाको उक्त बैठकबाट सन् २०३४ को विश्वकप आयोजनाको अधिकार साउदी अरेबियालाई प्रदान गर्ने निर्णय समेत

# एम्बाप्पेको गोलमा रियलको जित



काठमाडौं । स्पेनिस ला लिगाको आइतबार राती भएको खेलमा रियल म्याड्रिडले सेभियालाई ४-२ ले हराएको छ । केलिएन एम्बाप्पे र फ्रेड्रिको भाल्भार्डेले लामो दूरीबाट गरेको प्रहार गोलमा परिणत भएको थियो । यसैगरी रड्रिगोले पनि पहिलो हाफमा नै गोल गरे । दोस्रो हाफमा रियलका लागि ब्राहिम डियाजले गोल गरे ।

सेभियाका कप्तान ३९ औं मिनेटमा वैकल्पिक खेलाडीको रूपमा मैदानमा प्रवेश गर्दा सबै जना भावुक भएका थिए । क्लबमा २० वर्ष बिताएका उनको त्यो अन्तिम खेल थियो । खेलमा १० औं मिनेटमा एम्बाप्पेले लामो दुरीबाट गरेको प्रहार गोलमा परिणत भएको हो । त्यसको १० मिनेट पछि भाल्भार्डेले ३० यार्डबाट अर्को गोल गरे ।

रोड्रिगोले ३४ औं मिनेटमा गोल गरे । त्यसको लगत्तै इराक रोमेरोले घरेलु टोली सेभियाका लागि गोल गरेका थिए । दोस्रो हाफको ८ औं मिनेटमा एम्बाप्पेले उपलब्ध गराएको बललाई ब्राहिम डियाजले आकर्षक ढङ्गले गोलमा परिणत गरेका थिए । सोही गोलपछि नाभास मैदानमा उपस्थित भएका थिए । फुटबल इतिहासमा युरोपेली च्याम्पियनसिप, विश्वकप र युइएफ नेसन लिग जित्ने एक्लो खेलाडीको रूपमा कीर्तिमान कायम गरेका नाभासले २० वर्ष अघि म्याड्रिडकै मैदानमा सेभियाका लागि डेब्यु गरेका थिए । खेल सकिन पाँच मिनेट बाँकी रहँदा डोडी लुके बाइकोले सेभियाका लागि अर्को गोल गरे । जितपछि एक खेल कम खेलेको रियलले एट्लेटिको म्याड्रिडलाई पछि पार्दै अङ्क तालिकामा दोस्रो स्थानमा उक्लेको छ । १८ खेल खेलेका एट्लेटिको म्याड्रिडको ४१ तथा रियल म्याड्रिडको ४० अङ्क छ । १९ खेल खेलेको बार्सिलोना ३८ अङ्कसहित तेस्रो स्थानमा छ ।

आइतबार भएका अन्य खेलमा भिल्लारियलले लेगानेसलाई ५-२ ले तथा लास पल्मासले इस्पानियोललाई १-० ले हराए । यसैगरी, भ्यालेन्सिया र डेपोर्टिभो ला असभासको खेलमा २-२ तथा रियल बेटिस र रायो भल्कानो बिचको खेलमा १-१ गोलको बराबरी भयो ।

# चर्च ब्वाइजलाई झापा कपको उपाधि

काठमाडौं । झापा कपको उपाधि आज चर्च ब्वाइज युनाइटेड क्लबले जितेको छ । उपाधि जितेसँगै चर्च ब्वाइजले नगद रु १० लाख पुरस्कार प्राप्त गरेको छ । उपविजेता एनआरटी क्लबले पाँच लाख प्राप्त गरेको छ । झापा-११ द्वारा बिर्तामोडस्थित डोमालाल र इशालामा भएको फाइनल खेलमा चर्च ब्वाइजले एनआरटीलाई ३-१ गोलअन्तरले पराजित गरेको हो । गतवर्ष झापा गोल्डकपको छैटौं संस्करण पनि चर्च ब्वाइजले नै जितेको थियो ।

खेलको २१औं मिनेटमा चर्च ब्वाइजका समिर तामाडले एनआरटीका डिफेन्डरको मिसपासलाई सदुपयोग गर्दै पहिलो गोल गर्न सफल भएका थिए । खेलको ४३औं मिनेटमा चर्च ब्वाइजले अग्रतालाई दोब्बर बनायो । रोहन कार्कीले डिबक्समा मिलाइदिएको पासलाई विदेशी खेलाडी अर्मान्डले गोल गरेका थिए ।

त्यसको लगत्तै एनआरटीले १ गोल फर्कायो । विदेशी खेलाडी कार्लोसले दिएको क्रस पासमा कप्तानसमेत रहेका अञ्जन विष्टले गोल गर्दै नतिजा १-२ बनाएका थिए । खेलको अतिरिक्त समयमा समिर तामाङको पासमा अर्मान्डले अर्को गोल गर्दै चर्च ब्वाइजको जित सुनिश्चित गरेको थियो । खेलको प्लेयर अफ द म्याच विजेता टिम चर्च ब्वाइजका समिर तामाङ भएका छन् । उनले नगद रु १० हजार पुरस्कार प्राप्त गरे ।

प्रतियोगिताको उत्कृष्ट गोलरक्षक चर्च ब्वाइजका किशल मोक्तान, प्रतियोगितामा सर्वाधिक गोलकर्ता एनआरटीका अञ्जन विष्ट, झापा ट्यालेन्टका रुपमा छनोट भएका झापा-११ का प्रदिप बुढाथोकीले जनही रु ३५ हजार नगद प्राप्त गरेका छन् । 'मस्ट भ्यालुएबल प्लेयर' चर्च ब्वाइजका रोहन कार्की भए । उनले नगद रु एक लाख प्राप्त गरे ।

यसैबीच, झापा ११ एफसीका व्यवस्थापक गोपाल राईलाई क्लबले नगद रु २५ हजारसहित लाइफ टाइम अचिभमेन्ट अवार्ड प्रदान गरेको थियो । विजेता तथा उपविजेतालाई प्रमुख अतिथि संविधानसभा सदस्य सुधीरकुमार शिवाकोटी, गोर्खा टी स्टेटका सञ्चालक उदय चापागाई, आयोजक झापा ११ एफसीका अध्यक्ष जलकुमार गुरुङ, नेपाल उद्योग वाणिज्य महासङ्घ कोशीका पूर्वअध्यक्ष टीकाराज ढकाल, अर्जुनधारा नगरप्रमुख बलदेव गोम्देन, बिर्तामोडका उपप्रमुख नगेन्द्रप्रसाद संग्रौला, झापाका प्रमुख जिल्ला अधिकारी बन्धुप्रसाद बास्तोलालगायतले पुरस्कार वितरण गरेका थिए ।

## कांग्रेस....

ाउने ओलीको चाहना लुकेको छैन । भाषणमा भनिरहने विषय होइनन्, आकांक्षाका यी अन्तर्यहरू । ओलीमा गठबन्धन वा ठूलो शक्तिको नेतृत्व गर्ने क्षमता हुन्थ्यो भने नेकपा टुट्ने थिएन । एकीकृत समाजवादीको जन्म पनि ओलीले रोक्न खोजेनन् । प्रतिस्पर्धीहरूका खुट्टा भाँचिए म दौड जित्ने थें भन्ने मनोगत आकांक्षा हो उनको । अनि उनले नेकासँगको मिलापलाई कुन चातुर्य प्रयोग गरेर जारी राख्छन् ?

वामपन्थीहरू देशको सापेक्ष शक्तिको तुलनामा हुँकार बढी गर्छन् । यस्तो हुँकार घरेलु र ाजनीति र विदेशनीतिमा परावर्तन हुन जान्छ । दलीय दृष्टिकोणमा पनि वामपन्थीहरू आफ्नो दलको वस्तुगत क्षमताभन्दा आफूलाई बढी आँकिरहन्छन् । यसका पछाडि केही सैद्धान्तिक कारण छन् । उनीहरू समाजको ठूलो हिस्सालाई आफूले प्रतिनिधित्व गरेको भ्रमबाट पूर्णतः नियन्त्रित हुन्छन् । यस भ्रमले उनीहरूलाई आफ्नो वास्तविक शक्ति र क्षमता पहिचान गर्नै दिँदैन ।

नेपालको संविधानले सीमित क्षेत्राधिकारको सरकारको परिकल्पना गरेको हो । सरकारको तथाकथित सर्वव्यापकता र सर्वशक्तिलाई संविधानले संकुचन गरेको छ । संविधानका लिपिबद्ध यिनै प्रावधान कार्यान्वयन गर्ने हो भने दुई तिहाइ मत तुकसिद्ध कुरा होइन । जहाँसम्म सातबुँदे समझदारी र संविधान संशोधनको विषय छ त्यो खासमा दुई कारणबाट निर्देशित छ । पहिलो, नेका-एमालेमा रहेको मनोवैज्ञानिक त्रासको उपचार खोज्नु र दोस्रो, दोष संविधान र राजनीतिक प्रणालीलाई दिनु ।

नेपालको राजनीतिमा कुनै अमूक समस्या आफैं खडा गरी त्यसको समाधान खोज्दैछौं भन्ने प्रमाणित गर्नमै दलहरूले वितेका १६ वर्ष खर्च गरे । कांग्रेस-एमालेहरूको सत्ता बाँडफाँटका भित्री अन्तर्यहरू बाहिर ल्याउन नमिल्ने हुनाले बाहिर ल्याउन मिल्ने कुरा खोजी गर्दा संविधान संशोधन भेटिएको हो । योभन्दा उत्तम त के हुन्थ्यो भने अहिले उनीहरू जे जे गरिरहेका छन् यसै गर्न हामी मिल्ने हो भन्न सक्नुपर्थ्यो ।

नेका-एमाल बीच सैद्धान्तिक र व्यावहारिक रूपमा तीक्ष्ण मतभेदहरू छन् ।

नेकपा एमाले - दलको मार्गदर्शक सिद्धान्त मार्क्सवाद लेनिनवाद हुनेछ ।

- न्यायालयको चीरहरण गर्ने अगुवाई नेपाली कांग्रेसले गरेको छ ।

- अदालतको पर मादेशमा स्वेच्छाचारी परमादेशबाट प्रधानमन्त्री नियुक्त हुने र पर मादेशबाट शासन चलाउने घातक अभ्यास सुरु भयो ।

- समाजवादको अपरिहार्यता र वामपन्थी विकल्पको औचित्य पुनर्पुष्टि भएको छ र कम्युनिष्ट आन्दोलनको एकीकरण जस्ता कार्यभार पूरा गरेका छौं ।

- गठबन्धन दलहरू नै संवैधानिक र संसदीय बाटोबाट होइन, सडकबाटै न्यायाधीश फेर्ने जस्तो अराजकतालाई प्रोत्साहन र संरक्षण गरिरहेका छन्, न्यायपालिकालाई पङ्गु र निरीह बनाउने कारक तत्व बनिरहेका छन् ।

- विदेशीहरूका लागि 'कम्फर्टेबल' बन्ने वचनबद्धता सहित गठन भएको गठबन्धन सरकार नेपालको राष्ट्रिय हितमाथि निरन्तर आँच पुगिरहँदा पनि मूकदर्शक बनेको छ ।

- लिम्पियाधुरा, लिपुलेक र कालापानी लगायत नेपाली भू-भागमा नेपालको अडान स्पष्ट पार्न समेत नसक्ने निरीहता प्रकट गरिरहेको छ ।

- एमाले अध्यक्ष केपी ओली नेतृत्वमा सरकार बनेको समयदेखि संविधान, लोकतान्त्रिक प्रणाली, नागरिक अधिकार, संवैधानिक संस्था माथि नियोजित आक्रमण गरियो ।

- नेकपा (एमाले) को सर्वसत्तावादी प्रवृत्तिको कारणले संविधानसभाद्वारा निर्मित संविधान नै असफल हुने दिशातर्फ उन्मुख भएपछि पार्टीले सरकारको नेतृत्व गर्नु परेको हो ।

- सरकारले पाएको अधिकांश समय र ऊर्जा सर्वसत्तावादी शासन स्थापना गर्ने धृष्टतामा खर्च गरियो ।

- यो संविधानलाई कम्युनिष्टहरूको एकाधिकारवादी सोचको अतिक्रमणबाट जोगाउनु प्रमुख दायित्व हो ।

सत्तामा जानैपर्ने ओलीका बाध्यता राम्ररी बुझेको नेपाली कांग्रेस ओलीबाट आफ्ना कामहरू फत्ते गराउन चाहन्छ । गगन थापाको राजनीतिक सत्मार्गका लागि रवि लामिछानेको 'राजनीतिक बलि' नेपालको राजनीतिमा सायद ग्राह्य नै छ ।

बीआरआई सम्झौता त नेका पनि गर्थ्यो नै तर ओली महत्वाकांक्षाको उडनतस्तरीको प्वाँख, पखेटा काटिदिएर बेइजिङ पठाउनु उचित ठानेको देखिन्छ । सनपाटको डोरीले खुट्टा बाँधेर ओलीलाई नेकाले कुद्न छाडिदिएको छ, परै जाने देखियो भने डोरी तानेर ओलीलाई लडाइदिने विकल्प ऊसँग खुला छ ।

ओलीलाई हटाउने आफूसँग कांग्रेस मिल्ने मूल्यमा प्रचण्ड कांग्रेस सभापति देउवा (हुनेवाला प्रधानमन्त्री) को राजनीतिक सल्लाहकारको काम गरिरहेकै छन् । गज्जब के छ भने यति ठूलो वामपन्थी जनमत पनि बीआरआई सम्झौता सम्पन्न गरेबापत ओलीलाई बधाई दिइरहेको छैन । स्वयम् वामपन्थीहरू नै बधाई दिन र प्रशंसा गर्न किन लाज मानिरहेका छन् बुझिनसक्नु हुन गएको छ ।

त्यस पछाडिका कारणमा वामवादको सौन्दर्य विश्लेषक र वाम जनमतका तथ्यांकशास्त्रीहरू ओलीभन्दा फरक कित्तामा हुनुलाई मान्न सकिन्छ । कमसेकम पनि झलनाथ खनालले त बीआरआईका लागि ओलीको प्रशंसा गर्नुपर्ने थियो, गरेको देखिएन । यसले के पुष्टि गरेको छ भने वाम पाठशालाका एलुम्नाइहरू ओलीको पक्षमा कोही छैनन् ।

नेकाका आधिकारिक दस्तावेजहरूमा एमालेलाई कम्युनिष्ट एकाधिकारवादी, निरंकुश भनिएको छ । नेका-एमाले गठबन्धन बन्ने चरणमा ओलीले कतै 'निरंकुशता छाडें, अब म अब्बल लोकतान्त्रिक भएँ, पुनः संसद् भंग गर्दिनँ' भन्ने बकपत्र लेखिदिएका छन् ? छैनन् । त्यसो भए, नेकाले रिसको झोंकमा ओलीलाई निरंकुश, सर्वसत्तावादी, एकाधिकारवादी भन्ने गाली गरेको हो ? गाली मुद्दा दुर्गा प्रसाईंलाई मात्रै लाग्छ कि अरूलाई पनि लाग्छ ?

कांग्रेसका पुराना दस्तावेजहरूको संग्रह र अध्ययन गर्ने सौखिनहरू भन्छन्, गगन थापाको पदीय बढोत्तरीका कारण नेकामा एक सारभूत परिवर्तन आएको छ । त्यो के भने नेकाले आधिकारिक रूपमै कसैलाई गालीगलौज गर्न सिकिसकेको छ । त्यसमा गगन थापाको योगदान अविस्मरणीय छ भन्छन्, कांग्रेसका पुराना र दिग्गजहरू । वामपन्थीहरू आफूले तय गरेका सूत्रमा चल्छन्, समाज विवेकमा चल्छ, राजनीति नेतृत्वको नैतिक मूल्यमा । घोषित रूपमा त नेकाले कम्युनिज्म मान्दैन । कम्युनिष्टहरूलाई एकतन्त्रवादी, एकाधिकारवादी र निरंकुश विचार मान्दछ ।

उसले चुनावी घोषणापत्रमा भनेको पनि छ 'तर सत्ता र शक्तिको केन्द्रीकरण गर्ने तत्कालीन प्रधानमन्त्री केपी शर्मा ओलीको उन्मादी महत्वाकांक्षा लोकतन्त्र र समग्र प्रणालीलाई नै तहसनहस बनाउन उद्यत भयो । नेकपाको सरकारले अधिनायकवाद र सर्वसत्तावादको सूत्रपात गर्दै संवैधानिक निकायको कम्युनिष्टीकरण गऱ्यो ।' तर, नेकाले प्रधानमन्त्री त तिनै ओलीलाई बनायो । के नेकाले ओलीलाई बीपी नगरको कुश डुवाएको पोखरीमा धोएर चोखो पारेको हो ? त्यसैगरी एमालेले पनि नेकालाई लगाएका आरोपहरू आफ्ना दस्तावेजहरूबाट हटाएको हो ?

नेतृत्व र नेता बनाउने किङमेकरहरूको लागि बनेको हो यो गठबन्धन । तर यसले दलहरू बीचका भिन्नताको सारभूत सैद्धान्तिक अवधारणाहरूमाथि जुन प्रहार गरिरहेको छ त्यसको प्रकाशमा हेर्दा नेकालाई ओलीको भारी गह्रौं लाग्न थालेको छ । ओलीको भारी गह्रौं लाग्नुको कारण प्रचण्डको कुटुनी क्रेज, माधवकुमार नेपालको आफ्ना गुन नबिर्सन दिने चेतावनी, राजनीतिक रूपमा गिर्दै गएको ओलीको साख जस्ता परिघटनाहरूका कारण ओली-कांग्रेस यात्रा कठिन हुन थालिसकेको छ ।

वचनबद्धतामा अडिने देउवाको चरित्र मात्र यस्तो एक कारण हो जुन ओलीका लागि सहयोगी छ । तर आफ्नै दलको घुँडामा बन्चरो थापेर देउवाले ओलीको भारी बोकिरहन अब सम्भव छैन । नेका एमाले गठबन्धनले नेपालमा स्थापित र ाजनीतिक दलहरूप्रति मानवीय संवेदना मारिदिएको छ । यी दलहरू राष्ट्रिय संकटमा मिल्नुपर्नेहरू जन्त जान मिलेका छन् । र, आ-आफ्ना समस्या ज्युँका त्युँ राखेर र अझ दुई दलका समस्याहरू समेत थोपरेर सरकार बनेको छ ।

अर्को कुरा ओलीसँगको सत्ता जारी राखेर चुनावी प्रतिस्पर्धाका मूलभूत मान्यताहरूको क्षय र सिद्धान्तहरूको खण्डीकरणले पार्ने प्रभावको नतिजाको अनुमान पनि गठबन्धनको धड्कन बढाउने कारण हुन सक्छ । यी सबै कुराको संक्षिप्त सार के हो भने ओली सरकारले नयाँ वर्ष मनाउन पाउन चानचुने मिहिनेतले पुग्दैन ।

## मध्यपुर....

माटोको भाँडा बनाउने, मुकुण्डो बनाउने जस्ता परम्परागत र मौलिक पेशा रहेको मध्यपुर थिमि तिकिंबजी बजी (चिउरा)को लागि प्रख्यात शहर पनि हो । पछिल्लो समय सेरामिक्सको हबको रुपमा स्थापित बन्दै गइरहेको मध्यपुरको दिव्यश्वरी प्लानिङ रेष्टुरेन्ट र कोर्चा (राधेराधे) व्यापारिक क्षेत्रको रुपमा विकास भईरहेको छ ।

आधुनिकीकरण तर्फ द्रुत गतिमा अग्रसर रहेर पनि मध्यपुरले आफ्नो कला, सँस्कृति, पेशा, मनोरम प्राकृतिक सौन्दर्य, पुरातात्विक स्मारक र परम्परागत जीवनशैलीलाई आज पर्यन्त जिवन्त राखेको छ ।

२. मध्यपुर महोत्सव-२०८१

पर्यटनलाई स्थानीय विकासको साझेदार बनाउनु पर्दछ र स्थानीय सम्पदालाई रोजगारी एवम् आयसँग जोडेर अर्थतन्त्रलाई थप गतिशिल एवम् प्रगतिशिल बनाउन सकिन्छ भन्ने अवधारणामा 'मध्यपुर महोत्सव-२०८१' को आयोजना हुँदैछ । पर्यटनबाट हुने प्रत्यक्ष, अप्रत्यक्ष र उत्प्रेरित आर्थिक प्रभावलाई आत्मसाथ गरी स्थानीय अर्थतन्त्रका विभिन्न पक्षहरूमा गुणात्मक रूपान्तरण आजको आवश्यकता हो । पर्यटन प्रवर्द्धनका विविध पाटाहरू मध्ये विभिन्न अवसर र आकारमा आयोजना गरिने महोत्सव पर्यटन विकासको दिगो आधार र प्रवर्द्धनको प्रभावशाली औजार हो ।

मध्यपुरलाई पर्यटकीय गन्तव्यको रूपमा विकास गर्न पहिलो पटक बि.सं. २०५५, दोस्रो पटक २०५८ र तेस्रो पटक २०६१ मा मध्यपुर महोत्सव आयोजना गरिएको थियो । यसका साथै विभिन्न समयमा आयोजित वः महोत्सव, धिमेबाजा प्रतियोगिता, बाँसुरी बाजा प्रतियोगिता, भजन गायन प्रतियोगितालगायतका कार्यक्रमहरूले नगरलाई आन्तरिक एवम् वाह्य पर्यटकको आँखासम्म प्रभावकारी ढंगले पुर्याएको मीठो अनुभव छ ।

यिनै परिदृष्य र अवधारणामा 'मध्यपुर महोत्सव-२०८१' को आयोजना हुँदैछ । स्थानीय मौलिकतालाई केन्द्रमा राखेर संचालन गर्न लागिएको यस महोत्सवलाई एउटा जीवन्त र दिगो पर्यटनमुखी बनाइनेछ ।

३. महोत्वस कहिले हुँदैछ ?

महोत्सव २०८१ पुष १२, १३ र १४ गते, ने.सं ११४५ थिंल्लागाः द्वादशी, त्रियोदशी र चर्तुदशी एवम् सन् २०२४ डिसेम्बर २७, २८ र २९ मा हुँदैछ ।

४. महोत्सवको उद्देश्य

महोत्सवको मूल उद्देश्य मध्यपुरलाई नयाँ पर्यटकीय गन्तव्यको रुपमा विकास गरी दीर्घकालिन रूपमा नगर र नगर बासीको आर्थिक समृद्धिमा टेवा पुर्याउनु रहेको छ । यसका वस्तुगत उद्देश्यहरु निम्नानुसार रहेका छन् ।

क) नगरको स्थानीय कला, संस्कृति र सम्पदाको प्रदर्शन गर्ने ।

ख) स्थानीय मौलिक पेशा, परिकार र उत्पादनको प्रवर्द्धन गर्ने ।

ग) मध्यपुरलाई पर्यटकीय गन्तव्यको रूपमा परिचित गराउने ।

घ) समय समयमा हुने ऐतिहासिक जात्रा पर्वहरूको विषयमा जानकारी गराई सो समयमा पर्यटकको आगमन गर ाउने ।

५. महोत्सव सञ्चालन हुने मुख्य स्थान

थिमि शंखधरचोकबाट शुरु भई महोत्सवका विभिन्न कार्यक्रम र प्रदर्शनी बालकुमारी, चपाचो, नगदेश र बोदे हुँदै तिगनिको नीलबाराही स्थानसम्मका ऐतिहासिक बस्तीक्षेत्रमा सञ्चालन हुनेछ ।

६. महोत्सवमा के के अवलोकन गर्न सकिन्छ

महोत्सवमा नगरका विभिन्न स्थानमा करिव ४ सय स्टल र हने निश्चित भएको छ । क्षेत्रगत समितिहरुले संकलन गरी महोत्सव सञ्चालक समितिले अनुमोदन गरेको विवरण अनुसार स्थानीय मौलिक कला सँस्कृतिका अन्तर्गत २५ वटा विभिन्न नाचहरु प्रदर्शन हुनेछ । साँस्कृतिक बाजागाजा तर्फ २६ प्रदर्शनी हुनेछ भने नेपाली मुद्रा एवम् सिक्काहरुको प्रदर्शनी नगदेश र बोदेमा हुने व्यवस्था गरिएको छ ।

नेवारी संस्कार र भेषभुषा प्रदर्शनी ५, शैक्षिक प्रदर्शनी एक, विभिन्न प्रदर्शनी ४, माटोका भाँडाकुँडा र सेरामिक्स प्रदर्शनी १६, मूर्ति र मूर्तिकला प्रदर्शनी ४, बाजागाजासहित क्षेत्रगत परिक्रमा एक, खानाका स्टल ५०, पुस्तक प्रदर्शनी ४, परम्परागत खेल प्रदर्शनी २, दाफा भजन र अन्य भजनकिर्तन प्रदर्शनी ४५ स्थानमा रहनेछ ।

घरेलु तथा साना उद्योगका उत्पादन र हस्तकलाका उत्पादनहरुको बालकुमारी र चापाचो गरी दुई स्थानमा हुने प्रदर्शनीमा १२० स्टल रहने छ । ऐतिहासिक जात्रा, पर्व र नाचको डेमो प्रदर्शनी ७ स्थानमा रहने छ ।

ऐतिहासिक प्याखँ तथा नाचतर्फ अष्टमातृका नाच, ईन्द्रअप्सरा नाच, जोगी प्याखँ, दिगंवर(साँज्या) प्याखँ, द्योवंवीर प्याखँ, नागचा नाच, पुलुकिसि नाच, भष्मासुर, मयुर नाच, महाकाली नाच, राजकुमार नाच, लाखे नाच, लुसी प्याखँ, वाःपिज्या नाच, सलचा नाच प्रदर्शनीको व्यवस्था गरिएको छ ।

सांस्कृतिक बाजागाजा प्रदर्शनीतर्फ गुँला बाजा, घिन्ताङ्गघिसिं, धिमे बाजा, नायो खिं बाजा, नौ बाजा, बासुरी बाजा, दाफा भजन र अन्य भजनकिर्तन प्रदर्शनीतर्फ कृतन भजन, ज्ञानमाला भजन, दाफा भजन, नित्य भजन, भजन, रामायण भजन, हरि भजन रहने छ ।

महोत्सवमा प्रस्तुत हुने विविध कार्यक्रमहरुका बारेमा यसै प्रेस विज्ञप्तीसँगै विस्तृत विवरण यहाँहरुलाई वितरण गरिएको छ । उक्त विवरण अध्ययन गर्न आग्रह गर्दछु ।

७. महोत्सवका मुख्य आकर्षणहरु

महोत्सवका आकर्षणहरुमा भगवान गौतम बुद्धको अस्तुधातु चपाचोको पाटी विहार र नगदेशको बुद्ध विहारमा प्रदर्शन, थिमि भैलः ताहननीको डमीसँग सेल्फि लिन सक्ने, जिब्रो छड्ने जात्राको प्रतिमूर्तिसँग फोटो खिच्न पाइने, लिच्छवीकालदेखी हालसम्मको नेपाली मुद्रा र सिक्का, माटोको करिव ५ फिट अग्लो सुकुन्दा, नेपालको पहिलो माटोको हिटर आशा हिटर को मौलिक ढोका, टिगनीमा टिकँबजीको जिवन्त प्रदर्शनी, नगदेशमा सुनको झ्याल, बालकुमारीमा गेडागुडी, नेवारी सँस्कृतिमा जन्मदेखी मृत्युसम्मका संस्कार र अन्य चाडपर्वमा उपयोग हुने भोजका परिकारको प्रदर्शन रहेको छ ।

८. स्वास्थ्य, पार्किङ, सरसफाई, सुरक्षा व्यवस्थाका सम्बन्धमा

महोत्सव अवलोकनका लागि आउनुहुने सम्पूर्ण पाहुनाहरुलाई महोत्सवका बारेमा जानकारी दिन सूचना केन्द्र, नगरका विभिन्न अस्पताल र नगरका स्वास्थ्य केन्द्रहरुको सहकार्यमा प्राथमिक उपचार केन्द्र र स्वास्थ्य शिविरको व्यवस्था गरिएको छ ।

यस्तै सवारी साधनको व्यवस्थित पार्किङको लागि महोत्सव क्षेत्रका पार्टी प्यालेस, विद्यालय, कलेजहरुको प्रांगण, शंखधरचोक, पाटी बिहार नजिकको खेल मैदान, सिद्धिकालीको खेल मैदान लगायतका स्थानमा निःशुल्क पार्किङको व्यवस्था गरिएको छ । महोत्सवलाई मध्यनजर गरी महोत्सव सञ्चालन हुने नगरको पुरानो क्षेत्रमा बिहान ९ बजेदेखि साँझ ६ बजेसम्म आकस्मिक सेवा बाहेकका सवारी साधन प्रवेश निषेध गरिएको छ ।

महोत्सवलाई लक्षित गरी विशेष सरसफाई अभियान सञ्चालन भइरहेको छ । यसका लागि नगर भित्र फोहोर मैलाको क्षेत्रमा कार्यरत चार वटा संघसंस्था, नगर प्रहरी र नगरको द्रुत सहयोगीको समूह परिचालन गरिएको छ ।

महोत्सवका बेला शान्ति सुरक्षा र ट्राफिक व्यवस्थापनको लागि जिल्ला प्रशासन कार्यालय भक्तपुर, जिल्ला प्रहरी परिसर भक्तपुर, जिल्ला ट्राफिक प्रहरी परिसर भक्तपुर, शसस्त्र प्रहरी बल २२ नं. गण गुह्येश्वरी, नेपाली सेनाको गड्डाघर व्यारेक र भैरवनाथ गुल्म, राष्ट्रिय अनुसन्धान विभाग जिल्ला कार्यालय लगायतका निकायसँग सहकार्य र समन्वय भइरहेको छ । नगर प्रहरीको पनि परिचालन गरिनेछ ।

महोत्सवलाई भव्य, सभ्य र व्यवस्थितरुपमा सञ्चालन गर्न स्थानीय स्काउट, नगरको युवा क्लव र युवा क्लव सञ्जाल, विद्यार्थीहरुलाई स्वयम् सेवकको रुपमा परिचालन गरिनेछ ।

यसका साथै महोत्सव अवलोकनका लागि आउने पाहुनाहरुको सुविधाको लागि महोत्सव क्षेत्रमा निःशुल्क बसको व्यवस्था गरिनेछ ।

अन्त्यमा : नगरका विभिन्न विकास निर्माण, नीतिगत निर्णयलगायतका विषयमा यहाँहरुले निरन्तर समाचार सम्प्रेषण र प्रशारण गरी आमनागरिकलाई सू-सुचित गर्दै आइरहनुभएको छ । यसका लागि धन्यवाद ज्ञापन गर्दै यसपटक पनि महोत्सवका बारेमा लेख, रचना, समाचार यहाँहरुको लोकप्रिय सञ्चारमाध्यमहरुबाट प्रकाशन र प्रशारण गरी प्रचार प्रसारमा सहयोग गर्नुहुने अपेक्षासहित पुनः उपस्थित सञ्चारकर्मी मित्रहरुलाई धन्यबाद ज्ञापन गर्न चाहन्छौं । धन्यबाद !

सुरेन्द्र श्रेष्ठ
नगर प्रमुख एवम् संयोजक
मध्यपुर महोत्सव मूल समारोह समिति

## कोप....

उहाँहरूले जलवायु परिवर्तन मानव सभ्यताकै ठूलो चुनौतीको रूपमा आएकोले यसका विषयमा सबैले जान्न, बुझ्न र त्यसको अनुकुलनका लागि काम गर्न आवश्यक रहेको बताएको थियो ।

अहिले हिमालमा हिउँ पग्लिएर हिमाल कालो देखिँदै गएको भन्दै हिँउ पग्लिएर बनेको हिमतालको कारणले त्यस आसपासमा रहेका आदिवासी बस्तीहरू सबैभन्दा बढी जोखिममा रहेको सहभागीले बताएका थिए । जसले फोहोर गर्छ त्यसले नै त्यो फोहोर सफा गर्नुपर्छ भन्ने मान्यता भएपनि धनी मूलुकहरू जसले जलवायु परिवर्तन गर्न भूमिका खेलेका छन्, ती मुलुकहरूले तिर्छु भनेर कमिटमेन्ट गरेर रकम तिरेका छन् कि छैनन् र उक्त रकम आदिवासी जनजाति समुदायका लागि खर्च भएको छ कि छैन भन्ने कुरा बुझ्न आवश्यक रहेको उहाँहरूको भनाई थियो ।

हरेक वर्ष जलवायु परिवर्तन अनुकुलनका निम्ति कति बजेट आउँछ र त्यो कहाँ कसरी खर्च हुन्छ ? भन्ने कुरा जलवायु परिवर्तनबाट प्रभावित आदिवासीले थाहा पाउनुपर्ने सहभागीले बताए । नेफिनका अध्यक्ष गेल्जे लामा शेर्पाको अध्यक्षतामा भएको कार्यक्रममा कमल साम्पाङ र टुङ्गभद्र राईले जैविक विविधता र कोप सम्बन्धी जानकारी दिएका थिए भने देवकुमार सुनुवारले युएन भोलेन्टरी फन्डको विषयमा जानकारी दिएको थियो ।

त्यस अवसरमा नेफिनका अध्यक्ष गेल्जे लामा शेर्पाले केही समय पहिले शोलुखुम्बुको माथि थामेमा दुईवटा हिमतालहरू फूट्दा आदिवासी शेर्पा समुदाय प्रभावित भएको बताए । 'जलवायु परिवर्तनले नेपालमा के असर गरेको छ । त्यसले के कति क्षती पुर्‍याएको छ ? अहिले हिमालको हिउँ पग्लिएको छ । हिम तालहरूको संख्या वृद्धि भइरहेका छन् । जसले गर्दा हाम्रा आदिवासी वस्तीहरू जोखिममा छन्', अध्यक्ष शेर्पाले भन्नुभयो, 'अहिले त्यस्ता कम्तिमा पनि २ हजार तालहरू बढेका छन् । भोली त्यसले ल्याउन सक्ने क्षती निकै डरलाग्दो छ ।'

शक्ति राष्ट्रहरू जसका कारणले जलवायु परिवर्तन गराउन भूमिका खेलेका छन्, उनीहरूका कारण जलवायु परिवर्तनसँगै आदिवासी जनजाति समुदायका आर्थिक, भौतिक, सांस्कृतिक क्षती भएको उहाँको भनाई थियो । उहाँले भने, 'जलवायु परिवर्तनको कारणले हाम्रा हिमाल त पग्लिएका छन् नै । सँगै हामी आदिवासीको सांस्कृतिक क्षति भएको छ । भौतिक, आर्थिक क्षति भएको छ । अहिले जलवायु परिवर्तन गराउन भूमिका खेल्ने राष्ट्रहरूले पठाउने क्षतीपुर्ती बापतको रकम हामी आदिवासी जनजातिहरूको नाममा आउँछ । तर त्यो कहाँ कसरी खर्च भएको छ ?'

नेपालमा आदिवासी जनजातिको नाममा धेरै बजेट ल्याएर अरूले नै खर्च गरिरहेको भन्दै जसका निम्ति खर्च हुनुपर्ने हो त्यसका निम्ति खर्च नभएको दाबीसमेत अध्यक्ष शेर्पाले गर्नुभयो । 'आदिवासी जनजातिका नाममा विभिन्न गैरसरकारी संस्थाहरूले बजेट ल्याएर खाइरहेका छन् । तर नेफिनलाई थाहै छैन । २/४ जना आदिवासीहरू उभ्याएको छ । बजेट जति जम्मै कता गएको छ कता ?, उहाँले भन्नुभयो, 'केही गैरसरकारी संस्थाहरूले विदेशमा गएर नेपालमा आदिवासी जनजातिहरूको क्षेत्रमा काम गर्ने त हामी हो नि भनेर बजेट ल्याएर खाइरहेका छन् । तर त्यो आदिवासी जनजातिका लागि खर्च भएको छैन ।'

आदिवासीको नाममा आएको बजेटहरू सहि ठाउँमा लगानी नभएको भन्दै उनले त्यसलाई सही ठाउँमा लगानी गर्नका निम्ति काम गर्नुपर्ने समय आएको बताउनुभयो ।

जलवायु परिवर्तनले सबैभन्दा बढी क्षती आदिवासी जनजातिलाई भएकोले उनीहरूका नाममा आएको बजेट उनीहरूकै लागि खर्च हुनुपर्ने उहाँको भनाई थियो । त्यस अवसरमा बोल्दै राष्ट्रिय आदिवासी जनजाति महिला मन्चका अध्यक्ष सुनी लामाले जलवायु परिवर्तनका कारण सबैभन्दा बढी आदिवासी महिलाहरू प्रभावित हुने गरेको बताउनुभयो । प्रकृति र प्राकृतिक स्रोतसँग सबैभन्दा निकट आदिवासी महिलाहरू रहने र त्यसको प्रयोग पनि आदिवासी महिलाहरूले गर्ने भएकाले जलवायु परिवर्तनको असर आदिवासी महिलाहरूले भोग्दै आएको उहाँको भनाई थियो ।

कार्यक्रममा बोल्दै नेफिनका महासचिव दिवस राईले हिउँ पग्लिने र हिउँनदीहरू बढ्दै गएर त्यसका वरिपरि रहेका आदिवासी वस्तीहरू बढी भन्दा बढी जोखिममा रहने अवस्था रहेको जानकारी दिए । इन्डिजियसबाट

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमिTIMES

## थिमिमा हुने पाँचौं एपिक म्युजीक अवार्डको मनोनयन सार्वजनिक

काठमाडौं । एपिक नेपाली म्युजीक प्रालिको आयोजनामा मध्यपुर थिमिनगरपालिकामा आयोजना हुने पाँचौं एपिक म्युजीक अवार्ड २०८१ को उत्कृष्ट पाँच मनोनयन हालै सार्वजनिक गरिएको छ । प्रत्येक वर्ष हुँदै आएको एपिक नेपाल म्युजिक अवार्डमा यस वर्ष ३२ विधामा अवार्ड प्रदान गरिने कुरा कार्यक्रमका संयोजक राजेन्द्र पुरीले जानकारी दिएका छन् ।

भक्तपुरको मध्यपुर थिमिको निगूपुखुमा सम्पन्न हुने उक्त अवार्डलाई विशेष गरी देश भित्रका विभिन्न पुरातात्विक वस्तु, विविध संस्कृति जगेर्ना गर्ने उदेश्यले आयोजना हुँदै आएको कुरा प्रकाश पार्दै अवार्ड कार्यक्रमको मिति चाडै नै एक कार्यक्रमको आयोजना गरी जानकारी गराइने संयोजक पुरीले बताए ।

अवार्डमा नेपाली लोकगीत तर्फका नयाँ तथा पुराना गायक, गायिका, मोडलदेखि निर्देशकहरुलाई पनि समेटिएको उनको भनाई छ । संयोजक पुरीका अनुसार अवार्डमा नेपाली मौलिक भाकाहरुका चलचित्रका गीत साथै काँठे, नेवारी र देउडा गीत गायक, गायिका र मोडललाई पनि समेटिएको छ भने मनोनयनमा परेकाहरुको सुची आयोजक संस्था एपिक नेपालको फेसबुक पेजमा उपलब्ध रहेको कुरा पनि संयोजक पुरीले जानकारी दिएका छन्

## ६ महिनापछि दर्शकमाझ आउँदै दयाहाङ

काठमाडौं । अभिनेता दयाहाङ राईलाई लाग्दै आएको आरोप हो, धेरै सिनेमा खेल्छन् । हरेक महिनाजसो उनका सिनेमा प्रदर्शनमा आउँछन् । दर्शकलाई उनका कुन सिनेमा हेरौँ कुन नहेरौँ हुन्छ । हरेक महिना मात्रै होइन एकै दिन दयाहाङ अभिनीत दुईवटा चलचित्र पनि रिलिज भए । त्यो पनि एक पटक होइन दुई/दुई पटक ।

तर, यो पटक भने उनी निकै लामो समयपछि हलमा आउँदैछन् । 'कार्साङ'मार्फत पुस २६ गते उनी हलमा आउँदा उनको अघिल्लो सिनेमा रिलिज भएको करिब ६ महिना हुनेछ । अर्थात् ६ महिनापछि दयाहाङ आफ्ना दर्शकमाझ आउँदै छन् ।

'घर ज्वाईं' असार २८ गते रिलिज भएको थियो । त्यसयता दयाहाङ अभिनीत 'कार्साङ' रिलिज हुन लागेको हो । आधा वर्षाको ग्यापपछि दयाहाङ हलमा आउँदा दर्शकको साथ पाउने अपेक्षा निर्माणपक्षको छ । 'घर ज्वाईं' पनि व्यापारिक रूपमा सफल चलचित्र हो ।

आम ग्रामीण परिवेशको एक पारिवारिक जिम्मेवार अभिभावकको भूमिकामा दयाहाङ देखिने भएका छन् । अभाव र दुःखबीच आफ्नो जातिको संस्कारलाई जोगाउने इमान्दार चरित्रमा उनी देखिनेछन् । अभाव र इमान्दार समाजका भुइँ मान्छेहरू कसरी आफ्ना-आफन्त र समाजबाट पाखा लगाइन्छन् भन्ने 'कार्साङ'ले देखाउने यसको टिजरले देखाइसकेको छ । टिजरले भुइँ मान्छेको कथा 'कार्साङ'ले भन्ने र यो कथा दयाहाङमार्फत् भनिने प्रष्ट पारेको छ । यो चलचित्रले गरिबीमा जीवन बिताइरहेका आम नेपालीको कथा भन्दा दर्शकले शेर्पा समुदायको कल्चर पनि अनुभूत गर्न पाउनेछन् ।

प्रायः दयाहाङ हाइफाइ र छटपटेभन्दा मौलिक कथामार्फत चलचित्रमा देखिँदै आएका कलाकार हुन् । यसपटक पनि उनी शेर्पा समुदायको कथा लिएर दर्शकलाई भेट्न आउँदैछन् । 'कार्साङ' यम शेर्पाको डेव्यु निर्देशन हो । 'कार्साङ'को कथा पनि निर्देशक स्वयंले लेखेका छन् ।

चलचित्रमा अभिनेता दयाहाङ राईसँगै सिर्जना निङलेखु, जितु नेपाल, दीया मास्के, बुद्धि तामाङ, सृष्टि गौतम, डोमा ह्योल्मो, प्रेम लोप्चन, सुरवीर पण्डितलगायत कलाकारको अभिनय छ । सिर्जना निङलेखुको यो डेब्यु चलचित्र हो ।

यार्सा फिल्म्स र पुरुषोत्तम प्रधान फिल्मसको प्रस्तुतिमा निर्माण भएको चलचित्रमा पुरुषोत्तम प्रधान छायांकार हुन् । उनी निर्माता पनि हुन् । चलचित्रको सहनिर्माता गोविन्द बोहरा हुन् भने कार्यकारी निर्माता आङछिरिङ शेर्पा हुन् ।

## भूषण र शान्ति श्रीको "माया बराबर" बजारमा

काठमाडौं । भूषण खतिवडा र शान्ति श्री परियारको आवाजमा नयाँ गीत 'माया बराबर' सार्वजनिक गरिएको छ । फिन्जु पाख्रिनका प्रेमिल शब्दमा गायक भूषण खतिवडाकै सङ्गीत सुन्न सकिन्छ ।

'नेपमेलो' नामको युट्युब च्यानलमा सार्वजनिक गरिएको गीतको भिडियोलाई पनि उतिकै प्रेमिल प्रस्तुतिका साथ तयार गरिएको छ। सार्वजनिक भिडियोमा रियल जोडी लक्ष्मी बर्देवा र जीवन भट्टराईको सफल प्रेम यात्रालाई मनोरञ्जनात्मक शैलीमा प्रस्तुत गरिएको छ ।

उत्सव दाहालको छायाङ्कनमा तयार भिडियोमा लक्ष्मी र जीवनसँगै सागर दाहाल, विशाल पहारीको अभिनय रहेको छ। सार्वजनिक गीतमा हेमन्त कान्छा रसाइलीको सारङ्गी, रत्न विकेको बाँसुरी, सञ्जीव बराइलीको गितार तथा श्यामस्वेत रसाइलीको मिक्सिङ मास्टरिङ रहेको छ । यस 'माया बराबर' गीतको भिडियोलाई कलाकार द्वय लक्ष्मी र जीवनले नै निर्देशन गरेका हुन् ।

## गायक दिपेशको कोइली बनैमा सार्वजनिक

काठमाडौं । गायक दिपेश बिष्टको नयाँ गीत कोइली बनैमा सार्वजनिक भएको छ। डम्बर विश्वकर्माको रचनामा तयार भएको गीतमा दिपेश बिष्ट र शान्ति श्री परियारको सुमधुर आवाज रहेको छ भने यस गीतलाई लय युस्कल छिनालले गरेका छन ।त्यसैगरी संगीत संयोजन राजेन्द्र बाजुरालीले गरेकाछन ।

मायाप्रेममा आधारित यस गीतमा विशेषगरी गाउँघरमा केटाकेटी विच बसेको मायाप्रेमलाई मुख्य कथावस्तु बनाइएको छ । गीतमा केटाले आफुले मनपराएको केटीलाई तिम्रो मनमा म भएपनि नभएपनि तिमि भने मेरो मनमा सधै भरी रहिरहनेछौ भन्ने कुरा देखाउन खोजिएको छ ।

त्यसैगरी केटिले म कति माया गर्छु भन्ने कुरा देखाउन मिल्दैन त्यो त मेरो मनलाई थाहा छ भन्ने जस्ता कुरा गीतका शब्द मार्फत देखाउन खोजिएको छ । लामो समय नेपाली गीतसंगीतमा लागेका गायक दिपेश बिष्ट भन्छन आफुले गरेका सबै गीत उतीकै राम्रा लाग्छन अझ यो गीतमा मैले मात्र हैन हाम्रो सम्पूर्ण टिमले नै धेरै मेहनत गरेर तयार पारेका छौ त्यसैले पनि यो गीत हाम्रो तर्फबाट उत्कृष्ट लागेका छ ।

युटयुवमा हालेदेखीनै यस गीतलाई धेरैले मन पराईदिनुभएको छ । मलाई कस्तो लाग्ने भन्दा पनि दर्शकले कस्तो मान्नुहुन्छ तेसले भर पार्ने हो गीत राम्रो नराम्रो भन्ने सबै जिम्मा अब हामीले दर्शकको हातमा छोडिदिएकाछौं उहाहरुको प्रतिक्रिया अहिले सम्म राम्रो आएको छ ।

गीतको म्यूजिक भिडियोलाई निर्देशक विनोद भण्डारीले गरेका छन भने गीतको मुख्य भूमिकामा पनि भण्डारी आफै रहेकाछन साथमा उनलाई जुना विश्वकर्माले साथ दिएकीछन । मालाश्री स्टुडियोमा रेकडिङ गरिएको यस गीतको म्यूजिक भिडियोको सम्पादन भने मनोज कार्कीले गरेकाछन ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

# THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क २२ ने.सं. ११४५ पोहेलाथ्व द्वितीया पुस १७ गते बुधबार, २०८१ 01 Jan. 2025 Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## सत्ता टिकाउन संयन्त्र बनाउँदै दुई ठूला दल नेकपा एमाले र कांग्रेस !



काठमाडौं । साना दलहरुलाई पन्छाएर संसदमा बहुसंख्यक सदस्य रहेको दुई ठूला दलहरु नेकपा एमाले र कांग्रेस जसको दई तिहाइ बहुमत रहेको थियो । जसले परिणाम देखाउने गरी काम गर्न प्रतिबद्धताका साथ सरकार बनाएको थियो । तर सरकार गठन भएको ६ महिना सबसत सक्दासम्म सरकार, सदन र सार्वजनिक सेवा प्रवाहमा नागरिकले अनुभूत गर्नेगरी काम हुन सकेको छैन । त्यसैले सत्तारुढ दलहरूले कार्यदल गठन गरेरै भए पनि परिणाम देखाउने गरी काम गर्ने दाबी गरेका छन् ।

प्रधानमन्त्री केपी शर्मा ओलीका प्रेस संयोजक रामशरण बजगाईं कोरा राजनीतिक कुराले मात्रै नहुने बताउँदै विभिन्न कानूनी झमेला, प्रक्रियाका कमजोरीहरु रहेका कारण पनि ति सबैको समाधानका लागि नतिजामुखी बन्न कार्यदल बनाएर अगाडि बढ्न खोजिएको बताउँछन् । 'कांग्रेस-एमाले मिलेपछि भइहाल्यो नि भनेर हुँदैन । प्रधानमन्त्री, मुख्यसचिवले चाहेर मात्रै काम नहुने कानूनी जटिलता छन् । क्रिकेट रंगशाला बनाउन मन्त्रिपरिषद्को निर्णयले मात्रै नहुने रहेछ । कानूनी अल्झन र अप्ठ्यारो अवरोध गर्ने रहेछ । यसैले यस्ता कुरालाई मसिनो गरी हेर्न कार्यदल बनाइएको बजगाईंको दाबी छ । यस्ता कार्यदलले कानूनी अप्ठ्यारा, सदनको प्रभावकारिता बढाउन दिनुपर्ने प्राथमिकता, सरकारका सेवा प्रवाह बढाउने विषयमा सुझाव दिन्छन् । कानूनका अवरोधलाई हटाउने उपाय पनि सुझाउँछन् ।' उनले भने ।

सरकारमा देखिएका समस्याहरुको समाधानका लागि सुझाव दिन पनि यसअघि कात्तिक १५ गते राजनीतिक संयन्त्र गठन गरिएको थियो, जसमा दुवै दलका शीर्ष ८ नेता सहभागी थिए । तर, कांग्रेस सभापति शेरबहादुर देउवा र एमाले अध्यक्ष एवं प्रधानमन्त्री केपी ओलीले दोस्रो तहका नेताले आलोपालो अध्यक्षता गर्नेगरी बनाएको संयन्त्रले पनि कुनै काम गर्न सकेन । यो राजनीतिक संरचनाको मात्रै संयन्त्रले नपुगेपछि फेरि दलहरूले विज्ञसमेत समेटेर छुट्टाछुट्टै कार्यदल गठन गरेका हुन् । कांग्रेस-एमालेबीच भएको सात बुँदे सहमतिअनुसार संविधान संशोधनका लागि तयारी गर्न, संसद् र समितिमा अलपत्र परेका विधेयक अगाडि बढाउन र नागरिकले बोध गर्नेगरी सार्वजनिक सेवा प्रवाहलाई गति दिन कार्यदल बनाएर अगाडि बढ्ने समझदारी दलहरूले गरेका हुन् ।

सरकारका कामलाई गति दिएर सार्वजनिक सेवा प्रवाहमा सुधार ल्याउने गरी विज्ञ समेटेर कार्यदल गठन गरिएको छ, जसमा पूर्व मुख्यसचिव लीला गड्तौला, अधिवक्ता सेमन्त दाहाल, अरुण पौडेल, प्रताप पौडेल, राजेन्द्र घिमिरे र केदार कोइराला सदस्य रहेको कार्यदल

बाँकी पेज ७ मा

## खवप विश्वविद्यालय विधेयक अगाडि बढाउन जोड



भक्तपुर । शिक्षा, विज्ञान तथा प्रविधि मन्त्री विद्या भट्टराईले भक्तपुर नगरपालिकाद्वारा सञ्चालित शैक्षिक संस्था र ख्वप अस्पतालको निरीक्षण गर्दै नगरपालिकाले सञ्चालन गरेको ख्वप विश्वविद्यालयको प्रक्रिया अगाडि बढाउन जोड दिएका छन् । सो सन्दर्भमा मन्त्री भट्टराईले विश्वविद्यालय सञ्चालनको लागि आवश्यक भौतिक पूर्वाधार हरुको निरीक्षणसमेत गरेको थियो । मन्त्री भट्टराईलाई नेपाल मजदुर किसान पार्टीका सचिव एवम् संघीय सांसद प्रेम सुवाल र भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले नपाबाट सञ्चालित ख्वप कलेजमा स्वागत गरेको थियो । निरीक्षणपछि आयोजित छलफल कार्यक्रममा मन्त्री भट्टराईले भक्तपुर नगरपालिकाले शिक्षामा गरेको कार्य उदाहरणीय र अनुकरणीय रहेको बताउँदै भक्तपुर नपाले

बाँकी पेज ७ मा

## चन्द नेतृत्वको पार्टीले ०८४ को आम चुनावमा भाग लिने




काठमाडौं । नेत्रविक्रम चन्द नेतृत्वको नेपाल कम्युनिस्ट पार्टीले आगामी २०८४ मा हुने निर्वाचनमा भाग लिने निर्णय गरेको छ । हालै सम्पन्न भएको केन्द्रीय समितिको छैठौँ पूर्ण बैठकले पार्टी दर्ता गरेर ०८४ को निर्वाचनमा भाग लिने निर्णय गरेको हो । आगामी २१ फागुनदेखि जनमार्चा सञ्चालन गर्ने भएको छ । छैटौं पूर्ण बैठकको निर्णय

बाँकी पेज ५ मा

## मध्यपुर महोत्सव सम्पन्न, ५ लाख भन्दा बढीले गरे अवलोकन !




भक्तपुर । आज भन्दा दुई दशक अघि पहिलो पटक थिमि महोत्सवको आयोजना भएको थियो । त्यो बेलामा समुदायस्तर मिलेरै थिमि महोत्सव आयोजना गरेको थिया भने यसपालि भने मध्यपुर थिमि नगरपालिकाले मध्यपुर महोत्सव आयोजना गरेको थियो । यस अघि तीन पटकसम्म महोत्सवको आयोजना भैसकेको छ भने यस बर्षको तीनदिने मध्यपुर महोत्सव-२०८१ चौथो पटक आयोजना गरिएको महोत्सव आइतवार सम्पन्न भएको छ । उपप्रधान तथा शहरी विकास मन्त्री प्रकाशमान सिंहले बालकुमारी मन्दिर परिसरमा उद्घाटन गरी शुरु गरेको महोत्सव आइतवार साँझ बोदेको कुमारी पार्क स्थित पलेस्वाँ पुखुः परिसरमा सँस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्री बद्रीप्रसाद पाण्डेले समापन गरेको थियो ।

काठमाण्डौं उपत्यकाको मध्य भागमा अवस्थित रहेको मध्यपुर थिमि नगरपालिका ऐतिहासिक एवम् साँस्कृतिक शहर भएतापनि अपेक्षाकृत रुपमा पर्यटनको विकास हुन नसकेको अवस्थालाई ध्यान दिँदैं आन्तरिक र वाहृय पर्यटक भित्राउन महोत्सव आयोजना गरिएको थियो । समापन कार्यक्रममा बोल्दै मन्त्री पाण्डेले, "मध्यपुर थिमिले भौतिक पूर्वाधारको विकास गरे पनि पर्यटकीय विकास गर्न सकेको थिएन, यस्तो अवस्थामा यो महोत्सवको आयोजना गयौं, महोत्सवबाट पर्यटकीय नगर बनाउन र आर्थिक विकासमा पनि अगाडि बढ्न टेवा पुर्याएको छ । अब पर्यटन प्रबर्द्धनका लागि मध्यपुर अगाडि बढेको छ ।"

नगर प्रमुख सुरेन्द्र श्रेष्ठले नगरपालिकाले पर्यटकीय गन्तव्य बनाउन हरेक महिना कुनै न कुनै पर्यटकीय गतिविधि गर्ने प्रतिबद्धता व्यक्त गरे । महोत्सवको समय अपुग भएकाले थप गर्न माग भएता पनि नसकिएको उल्लेख गर्दै उनले तीन दिनको महोत्सवमा पाँच लाख आगन्तुक आउने अपेक्षा गरिएकामा आठ लाखभन्दा बढीले अवलोकन गरेको दाबी गरे । महोत्सवको समापन कार्यक्रममा संस्कृति, पर्यटन तथा नागरिक उड्डयनमन्त्री बद्री पाण्डेले मध्यपुर महोत्सवले साँस्कृतिक क्षेत्रमा अभूतपूर्व कार्य गरेको बताउँदै तीन दिनसम्म चलेको महोत्सवले परम्परागत नेवारी

बाँकी पेज ७ मा

## धर्मनिरपेक्षता, समावेशी र संघीयता नहटाउन आदिवासी अभियन्ताहरुको खबरदारी

काठमाडौं । धर्मनिरपेक्षता, समावेशी र संघीयता नहटाउन आदिवासी अभियन्ताहरुले सांसदहरुलाई खबरदारी गरेको छ । संविधान संशोधनको विषय उठिरहेको सवालमा संविधानले सुनिश्चित गरेको आदिवासीले प्राप्त गरेको अधिकारलाई संरक्षण गर्दै नपुगेका अधिकारलाई थप्न आग्रह गरेको हो ।

नेपाल आदिवासी जनजाति महासंघ (नेफिन)ले आयोजना गरेको नेपालको संविधानमा आदिवासी जनजातिका सवालहरू विषयक राष्ट्रिय गोष्ठीमा बोल्ने वक्ताहरुले त्यस्तो बताएको हो । पूर्व सांसद जिपछिरिङ शेर्पाले आफ्नो पार्टीभित्र आदिवासी जनजातिले प्राप्त अधिकारको संरक्षण गर्दै थप अधिकार प्राप्तिका निम्ति पार्टीमा नेतृत्वको लबिङ गर्न आग्रह गरे । उनले प्रतिनिधि सभा सदस्य र राष्ट्रिय सभा सदस्यहरुले संसदमा आदिवासी सांसदहरुले आदिवासीको अधिकारको सवालमा आवज उठाउन सक्ने क्षमता राख्नुपर्ने भनाइ राखे ।

नेफिनका अध्यक्ष गेल्जे लामा शेर्पाको अध्यक्षतामा भएको कार्यक्रममा कार्यपत्र प्रस्तुत गर्दै अधिवक्ता नेपालको संविधानले आदिवासी जनजातिलाई दोस्रो दर्जाको नागरिकमा राखेको भनाई राखे । उनले भूमि र प्राकृतिक स्रोतको दोहनले दिनदिनै हनन भइरहेको बताउँदै गुठी संस्कृति, मन्दिरहरू भत्काइएको आरोप लगाए । आदिवासीको प्रतिष्ठानमा संविधानले प्रहार गरेको भन्दै अधिवक्ता लिम्बूले दिनदिनै आदिवासी विरुद्धका कानुनहरू बन्दै गएको बताए ।

कार्यक्रममा बोल्दै नेफिनका अध्यक्ष शेर्पाले आदिवासी सांसदहरूले आदिवासीका सवालमा नीति नियम बनाउँदा आदिवासी जनजातिको हित हुनेगरी बनाउनतिर ध्यान दिनुपर्ने सुझाव दिए । नेफिनका वरिष्ठ उपाध्यक्ष बुद्ध घर्ती भुजेलको स्वागत मन्तव्यबाट सुरु भएको कार्यक्रममा बोल्दै पूर्वमन्त्री तथा सांसद सुदन किराँतीले नेपाली समाज सुहाउँदो प्राज्ञिक अध्ययन हुनुपर्ने भनाई राखे । उनले मुलुकलाई विभाजन गर्न र देशलाई गृहयुद्धतिर धकेल्नतिर लान खोजिरहेको बताउँदै केही शक्तिले समानुपातिक व्यवस्था हटाएपछि मुलुक स्थिर हुन्छ भन्ने भ्रम फैलाइरहेको बताए ।

सांसद किराँतीले जनजागरण र संशोधन सँगसँगै हुनुपर्ने भन्दै आदिवासीको अधिकारका विरुद्धमा लाग्नेलाइ निर्वाचनबाट दण्डित गर्ने खाका

बाँकी पेज २ मा

# चाँगुमा विपद् जोखिम न्यूनीकरण तथा सुशासन मूल्यांकन सुचकको कार्यक्रम

भक्तपुर । सङ्घीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय, वातावरण तथा विपद् समन्वय माहाशाखाको समन्वयमा चाँगुनारायण नगरपालिकाको विपद् जोखिम न्यूनीकरण तथा सुशासन मूल्यांकन सुचकको कार्यान्वयन तथा विपद् व्यवस्थापन तथा जोखिम न्यूनीकरण सम्बन्धि १ दिने कार्यक्रम सम्पन्न भएको छ । आइ.एफ.आर.सी तथा नेपाल रेडक्रस सोसाइटीको प्राविधिक सहयोगमा सञ्चालित कार्यक्रममा नगरपालिकाको कानुनी व्यवस्था, संस्थागत तथा संगठनात्मक संरचना, योजना तर्जुमा, कार्यान्वयन तथा अनुगमन र मूल्यांकन, समन्वय, साझेदारी तथा सहकार्य, श्रोत साधन तथा क्षमता, अन्तरसम्बन्धित विषयहरु गरी विभिन्न ६ वटा क्षेत्रहरुको सुचकका आधारमा मूल्यांकन गरिएको थियो । कार्यक्रमको शुरुवात गर्दै चाँगुनारायाण नगरपालिकाका नगर प्रमुख जीवन खत्रीले चाँगुनारायण नगर क्षेत्र विपद्का दृष्टिकोणले जोखिम क्षेत्रमा पर्ने भएकाले सम्भावित विपद्को जोखिम न्यूनीकरण गरी नगरबासीलाई सुरक्षित राख्ने तर्फ नगरपालिकाले प्राथमिकताकासाथ काम गर्दै आएको बताए । उनले यस वर्षको मनसुनका कारण क्षति भएका सार्वजनिक पूर्वाधारहरु पूर्ननिर्माणको लागि नियमित विकासका बजेटबाट समेत १० प्रतिशत कटौती गरी कोष खडा गरिएको जानकारी दिए । नगर प्रमुख खत्रीले नियमित रुपमा गरिने यस प्रकारको विपद् जोखिम न्यूनीकरण तथा सुशासन मूल्यांकनले विपद् व्यवस्थापन क्षेत्रमा स्थानीय तहको क्षमता अभिबृद्धिमा मद्दत पुग्ने बताउदै नगरपालिकासंग सहकार्य र समन्वय गर्ने सबै सरकारी तथा गैह्र सरकारी निकायलाई धन्यवाद दिए ।

सहभागितामूलक आधारमा गरिएको मूल्यांकनमा चाँगुनारायण नगरपालिकाले १०० पूर्णांकमा ८४.५ अंक प्राप्त गरेको थियो । कार्यक्रममा संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय, वातावरण तथा विपद् व्यवस्थापन महाशाखाका सहसचिव काली प्रसाद पराजुलीले विपद् जोखिम न्यूनीकरण तथा व्यवस्थापन सम्बन्धि कानुनी तथा नीतिगत व्यवस्थाका बारेमा प्रस्तुती दिएको थियो । शाखा अधिकृत जयराम उप्रेतीले विपद् जोखिम न्यूनीकरण तथा व्यवस्थापनको योजना तथा विषयगत क्षेत्रमा मुलप्रवाहिकरणका बारेमा प्रस्तुतीकरण गरेको थियो ।

चाँगुनारायण नगरपालिकाका विपद् व्यवस्थापन इकाई प्रमुख दिनेश थापाले चाँगुनारायण नगरपालिकाले विपद् व्यवस्थापन क्षेत्रमा गरेको प्रयासका बारेमा जानकारी गराएको कार्यक्रममा नगरपालिकाका नगर प्रमुख खत्री, संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालयका सहसचिव पराजुली, चाँगुनारायण नगरपालिकाका प्रमुख प्रशासकिय अधिकृत शिव प्रसाद हुँमागाई, नेपाल रेडक्रस सोसाइटी भक्तपुर जिल्ला शाखाका सभापति परशुराम पाण्डे, वडा अध्यक्षहरु, कार्यपालिका सदस्यहरु, शाखा तथा उपशाखा प्रमुख तथा कर्मचारीहरु गरी ५३ जनाको उपस्थिती रहेको थियो ।

कार्यक्रमको समापन गर्दै नगरपालिकाका प्रमुख प्रशासकिय अधिकृत हुँमेगाईले नगरपालिकाले गरेका पूर्वतयारीका कारण मनसुनजन्य विपद्को अवस्थामा प्रभाबकारी प्रतिकार्य गर्न सफल भएको बताए । उनले नगरपालिकाको विपद् जोखिम न्यूनीकरण तथा सुशासन मूल्यांकन कार्यक्रममा सहजिकरण तथा समन्वय गरेकोमा संघीय मामिला तथा सामान्य प्रशसन मन्त्रालय, वातावरण तथा विपद् व्यवस्थापन महाशाखा, आइ.एफ.आर.सी तथा नेपाल रेडक्रस सोसाइटीलाई नगरपालिकाको तर्फबाट हार्दिक धन्यवाद व्यक्त गरे ।

# महोत्सव जनताको एकता प्रदर्शन गर्ने अवसर

भक्तपुर । भक्तपुर नगरपालिका वडा नं. १० को आयोजनामा मंसिर २८ गतेदेखि पुस २ गतेसम्म भएको भक्तपुर महोत्सव सफलतापूर्वक सम्पन्न गर्न वडाभरीका सहयोगी संघसंस्था, विद्यालय, सरकारी कार्यालय, दाफा, भजन, बाजागाजा समूह, स्वयम्सेवक लगायतलाई धन्यवाद कार्यक्रम नगर प्रमुख सुनिल प्रजापतिको प्रमुख आतिथ्यतामा सोमबार सम्पन्न भयो । कार्यक्रममा प्रमुख अतिथि सुनिल प्रजापतिले महोत्सव भन्ने वित्तिकै जनताको एकता प्रदर्शन गर्ने अवसर भएको बताउँदै कस्तो भक्तपुर चिनाउने, पहिला र अहिलेको फरकका साथै भक्तपुर के हो ? भने महोत्सवले शिक्षा र ज्ञान दिएको बताउनुभयो । उहाँले भक्तपुर लायक्कु, टौमढी र दत्तात्रय स्क्वायर मात्र नभई गल्ली गल्ली चिनाउने उदेश्य अनुरुप महोत्सवमा क्वाठण्डौंमा बासुरी प्रतियोगिता राखेको बताउँदै आन्तरिक पर्यटक प्रवर्द्धन गर्न सफल भएको बताउनुभयो ।

उहाँले ठूलठूला दुर्घटना कोरोना, भुकम्प र युद्धले विदेशी पर्यटकहरु नआउने सम्भावना भएकोले अन्तरिक पर्यटकको भक्तपुरमा बसाई बढाउने सोचमा गरेको महोत्सवले भक्तपुरको सम्पदा, कला संस्कृति, परम्परागत हस्तकला, खाना महोत्सव उनीहरुको स्थानमा पनि विकास गर्ने छ भन्नुभयो । उहाँले प्रकृतिले दिएको हिमाल, जडिबुटी, बन्यजन्तु, चराचुरिङ्गीहरु जस्ता स्त्रोतसाधन र मानव निर्मित सम्पदाहरु हेर्न आउने भएकोले सरकारमा बसेका शासकहरुले यसको अन्तर्राष्ट्रिय रुपमा प्रचारप्रसार गर्न नसक्दा ओझेलमा परेको महोत्सवले प्रचारप्रसार र सांस्कृतिक जगेर्नामा टेवा पुऱ्याएको बताउनुभयो ।

उहाँले विभिन्न मन्त्री र विभिन्न जिल्लाका जनप्रतिनिधिहरु भक्तपुरमा सामाजवादी मोडलले काम भएको भनि हेर्न आउने भक्तपुर पहिला पाइला टेक्न इट्टा विछ्याउनुपर्ने अवस्थालाई सुत्न मिल्ने गरी सफा भएको प्रशंसाहरु सुनाएको कुराहरु सुनाउनुभयो । उहाँले महोत्सवमा शौचालय लगायत सानोसानो कुराले नकारात्मक संन्देश नजाओस् भने चिन्तनमन्नलाई सबै नगरबासीहरुले सहयोग गरेकोकोमा धन्यवाद दिनुभयो । उहाँले जनताले गरेको सहयोगको प्रतिफल पनि जनताले नै पाउने बताउँदै महोत्सवले बाजागाजा, नाचगानका कलाकारहरुलाई व्यवसायीकरण गरी रोजगारी सृजना गर्ने बताउनुभयो ।

उहाँले जनता र नगरपालिकाको सम्बन्ध नङ्ग र मासु जस्तै भएकोले सम्पदा संरक्षणमात्र होइन नयाँ निर्माण पनि भई रहेको बताउँदै टेरेकोटाको घरहरु, कलेज, अस्पताल बनाएको र सरकारले स्विकृति नदिएकोले विश्वविद्यालय अगाडि बढ्न नसकेको बताउनुभयो । उहाँले भक्तपुर बनाउन पैसा भन्दा चरित्र मुख्य हुने बताउँदै सहयोगी भावनाले पाँचतल्ले मन्दिर, भैरब मन्दिर बन्ने जस्तै महोत्सवमा सीप कौशल प्रदर्शन भएको बताउनुभयो । उहाँले सीप नभएको व्यक्ति बेरोजगार हुने भएकोले नगरपालिकाले विभिन्न तालिमहरु दिएको बताउँदै खुसि जनता सुसि जनता हुने बताउनुभयो । उहाँले सहकारीमा ८७ अर्व अपचलन भएको तथ्याङ्कले नयाँ आएको सहकारी अध्यादेशले समुदायमा आधारित सहकारीहरुलाई अप्ठ्यारो पर्ने बताउनुभयो । कार्यक्रममा भुतपूर्व उपप्रमुख चैत्यराज शाक्यले महोत्सवमा सबैले आफ्नो क्षमता अनुसार सहयोग बताउँदै महोत्सवले पर्यटन प्रवर्द्धन भएको बताउनुभयो । उहाँले भक्तपुर अन्य उद्योग धन्दा विकास गर्न गाह्रो हुने भएकोले पर्यटन व्यवसाय नै भक्तपुरको आर्थिक विकास गर्ने बताउँदै कला संस्कृति नै यसको मुख्य सम्पत्ति हो भन्नुभयो ।

कार्यक्रममा बुद्धिजीवि पुष्परत्न शाक्यले नेपालमा भक्तपुरको जीवन पद्धती उन्नत भएको बताउँदै आनान्द, शान्तिपूर्वक जीवन यापन भक्तपुरमा मात्र सम्भव भएको बताउनुभयो । उहाँले बर्ष दिनको जात्रा, जन्मेदेखि मृत्युसम्मको जीवन पद्धती संस्कार संस्कृति सिक्ने अवसर पाएको बताउँदै शिक्षा र स्वास्थ्यमा पनि त्यतिकै काम भएको बताउनुभयो । कार्यक्रम १० नं वडाध्यक्ष लक्ष्मी प्रसाद ह्यौमिखाको सभापतित्वमा भएको कार्यक्रममा गौतम प्रसाद लासिव, लक्ष्मीप्रसाद चवाल, जितेन्द्र मुनाकर्मीले पनि बोल्नुभएको थियो भने विभिन्न संघसंस्थालाई धन्यवाद पत्र प्रमुख अतिथिले वितरण गर्नुभयो ।

## धर्मनिरपेक्षता....

तयार हुनुपर्ने समेत जोड दिए । यसैगरी पूर्वमन्त्री राजेन्द्र श्रेष्ठले अन्तरिम संविधान २०६३ भन्दा २०७२ सालको संविधान आदिवासी जनजातिका लागि प्रतिगमन भएको धारणा राखे । यसैगरी पूर्व सभामुख ओनसरी घर्ती मगरले आदिवासीहरू जुनसुकै पार्टीमा भएपनि आदिवासीको अधिकारका लागि एकजुट हुनुपर्नेमा जोड दिए । संविधान संशोधनका कुरा उठ्दै गर्दा आदिवासी जनजाति संघसंस्थालगायत सरोकारवालाहरुले सडकबाट पनि दबाबमूलक कार्यक्रम मार्फत दबाब दिनुपर्ने उनको भनाई थियो ।

पूर्वमन्त्री कृपासुर शेर्पाले आदिवासी जनजातिबीच अधिकार प्राप्तिका लागि अझ बढी सुदृढ एकता आवश्यक रहेको बताए । कार्यक्रममा बोल्दै पूर्व राज्यमन्त्री दिलमान पाखिनले एकढिक्का भएर आदिवासी अगुवाले आदिवासी अधिकार संरक्षणका निम्ति भूमिका खेल्नुपर्ने आवश्यकता औंल्याए । संघीयता, धर्मनिरपेक्षता, समानुपातिक समावेशिताको विषय सबै राजनीतिक दलमा उठिरहेको भन्दै उनले यसलाई विचार पुऱ्याउनुपर्ने बताए । आदिवासी, दलित, मुस्लिम, मधेशी समुदाय एक ठाउँमा बसेर सोच्न आवश्यक रहेको उनको भनाई थियो ।

यस्तै सांसद सुशीला श्रेष्ठले आदिवासी जनजातिका जातीय, भाषिक समस्या धेरै भएको बताउँदै त्यसको समाधानमा लाग्नुपर्नेमा जोड दिए । सांस्कृतिक तथा भेषभूषा प्रदर्शन मात्रै अहिले भइरहेको भन्दै उनले हिजो भएका विभेदका कुराहरूलाई पनि बाहिर ल्याउन आवश्यक रहेको बताए । मानवशास्त्री डा.मुक्तसिंह लामाले सत्ता र शक्तिसँग कसरी लड्ने भन्ने शक्ति यो दुई दशकको अवधिमा आदिवासी अगुवाहरूले सिकेको बताउँदै चुपचाप बसेमा आदिवासी जनजातिका निम्ति केहीपनि चाहिने रहेनछ भन्ने बुझाइ हुने बताए । गर्न सकिन्छ है भन्ने केही उदाहरण पनि रहेको भन्दै उनले बागमती प्रदेशमा नेपाल भाषा र तामाङ भाषा सरकारी कामकाजको भाषा बनाउने ऐन पारित भएको स्मरण गराए । जमिन खोस्ने अधिकार कसैलाई पनि नभएको भन्दै उनले कुनैपनि कानुन बनाएर आदिवासीको जमिन खोस्न नपाइने बताए ।

कार्यक्रममा संविधान सभाका सदस्यहरू पेम्बा भोटे, नगेन्द्र कुमाल, नेफिनका पूर्व महासचिव आङकाजी शेर्पा, आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानका उपाध्यक्ष रेशम गुरुङ लगायतले आदिवासीको अधिकार संरक्षणका निम्ति एकीकृत आवाज बोकेर जानुपर्ने विचार व्यक्त गरे । कार्यक्रमको सहजीकरण महासचिव दिवस राई र उपमहासचिव रामकृष्ण ब्लोन तामाङले गरेको थियो । इन्डिजिनियस भ्वाईस

# फोनिजलाई सत्यनारायणबहादुर श्रेष्ठ प्रेस स्वतन्त्रता सेनानी पुरस्कार

काठमाडौं । नेपाल पत्रकार संघको संस्थापक अध्यक्ष तथा शिक्षा अभियन्ताका रुपमा समेत परिचित स्वर्गीय सत्यनारायणबहादुर श्रेष्ठ प्रेस स्वतन्त्रता सेनानी पुरस्कार यस वर्ष नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) लाई संस्थागत रूपमा प्रदान गरिएको छ । नेवाः पत्रकार राष्ट्रिय दबूले शनिबार राजधानीमा आयोजना गरेको कार्यक्रममा सो पुरस्कार फोनिजलाई प्रदान गरेको हो । नेपालमा पत्रकारहरुलाई पहिलो पटक संङ्गठित गरी त्यसको नेतृत्व गर्ने तत्कालीन नेपाल टुडेका सम्पादक सत्यनारायणबहादुर श्रेष्ठको १०९ औं जन्मजयन्तीको अवसरमा सो सम्मान प्रदान गरिएको दबूका अध्यक्ष नृपेन्द्रलाल श्रेष्ठले जानकारी दिए ।

नेपाल पत्रकार महासङ्घको संस्थापक अध्यक्ष कायम गर्नमा फोनिजले महत्त्वपूर्ण दबाब कायम गरेको भन्दै फोनिजलाई संस्थागत रूपमा सो पुरस्कार प्रदान गर्ने निर्णय गरेको पुरस्कार निर्णायक समितिका संयोजक दबूका उपाध्यक्ष सुनिल महर्जनले बताए । समारोहमा नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ (फोनिज) का अध्यक्ष गजुरधन राईलाई पत्रकार राष्ट्रिय दबूका केन्द्रीय अध्यक्ष नृपेन्द्रलाल श्रेष्ठ, नेपाल आदिवासी जनजाति महासङ्घका वरिष्ठ उपाध्यक्ष बुद्ध घर्ती, स्वर्गीय श्रेष्ठकी छोरी सुजिता मानन्धरले नगद २५ हजार रुपियाँसहित सम्मानपत्र प्रदान गरेको थियो ।

नेवा पत्रकार राष्ट्रिय दबूले २०७६ सालदेखि श्रेष्ठको जन्मजयन्ती मनाउने र गत वर्षदेखि पुरस्कार दिन थालेको हो । गत वर्ष सो पुरस्कार पत्रकार लक्की चौधरीलाई प्रदान गरिएको थियो । सो अवसरमा नेपाल आदिवासी जनजाति महासङ्घका वरिष्ठ उपाध्यक्ष बुद्ध घर्तीले स्वर्गीय श्रेष्ठको इतिहासलाई उपेक्षा गरेर पत्रकार महासङ्घले सत्यलाई स्वीकार गर्न नचाहेको बताए । नेवाः पत्रकार राष्ट्रिय दबूका सचिव राजु नापितले स्वर्गीय श्रेष्ठको योगदानलाई फैलाउन पत्रकार दबूले हरेक वर्ष विविध कार्यक्रम गर्दैआएको जानकारी दिए । समारोहमा मधेशी पत्रकार समाजका अध्यक्ष मोहन सिंहले पत्रकार महासङ्घको विधान अधिवेशनमार्फत यस बहसलाई टुङ्ग्याउनु पर्नेमा जोड दिए

कार्यक्रममा हालै सम्पन्न पत्रकार महासङ्घमा निर्वाचित दबूका सदस्यलाई सम्मान समेत गरिएको थियो ।

# समाजवादी मोर्चाले माघ २४ मा वृहत् आमसभा गर्ने




काठमाडौं - विपक्षी चार दलीय समाजवादी मोर्चाले माघ २४ गते काठमाडौंमा वृहत् आमसभा गर्ने निर्णय गरेको छ ।

नेकपा एकीकृत समाजवादी पार्टीको कार्यालय आलोकनगरमा बुधबार बसेको मोर्चाको बैठकले आमसभा गर्ने निर्णय गरेको छ । यस्तै बैठकले सातै प्रदेशमा ठुला अन्तर्क्रिया गर्ने निर्णय भएको नेपाल समाजवादी पार्टीका अध्यक्ष महिन्द्र राय यादवले जानकारी दिए ।

यसैगरी चैतको पहिलो हप्ता मधेसमा ठुलो आमसभा गर्ने निर्णय भएको यादवले बताए ।

'सातै प्रदेशमा अन्तर्क्रिया गर्ने, माघ २४ गते काठमाडौंमा वृहत् आमसभा गर्ने निर्णय गरेको छ । । मधेस प्रदेशमा चैतको पहिलो हप्ता वृहत् आमसभा गर्ने निर्णय भएको छ', उनले भने ।

यस्तै मधेस प्रदेशको संयोजन गर्ने जिम्मा नेसपालाई दिएको यादवले बताए । बैठकले विचार मिल्ने अन्य पार्टीलाई मोर्चामा ल्याउन अधिकतम पहल गर्ने उनले जानकारी दिए ।

तर समीक्षा अध्ययन कार्यदलले प्रतिवेदन नबुझाएको तर छिट्टै बुझाउने विषयमा छलफल भएको उनको भनाइ छ । आजको बैठकले विप्लवलाई नै संयोजनको जिम्मेवारीमा निरन्तरता दिएको छ ।

पछिल्लो समय समाजवादी मोर्चाप्रति जनआकर्षण बढ्दै गएकाले राष्ट्रिय विकल्पको शक्तिमा उभ्याउनेबारे छलफल भएको उनले जिकिर गरे ।

# प्रविधिको विकास र प्राकृतिक समस्या समाधानमा कस्तो रह्यो सन् २०२४ को भूमिका ?

काठमाडौं । सन् २०२४ मा अव्यवस्थाका शक्तिहरू बलियो हुँदै जाँदा यो वर्ष विश्व मञ्चमा एक कठिन वर्ष भएको छ । भूराजनीतिक प्रतिस्पर्धा बढ्दै गएका छन् । विगतदेखि जारी युद्धहरू शान्त हुन सकेका छैनन् । सन् २०२४ को ग्रीष्मकालीन ओलम्पिक र पारालिम्पिक्स विश्वको सुन्दर सहर पेरिसमा सम्पन्न भएको छ । सन् २०२४ ले दिएका उपलब्धि र पाठले सन् २०२५ सबैका लागि प्रेरणाको वर्ष हुनेछ । विश्व जगतले विगतदेखि जारी राखेका सकारात्मक कामले सन् २०२५ र त्यसपछिका वर्षमा पनि निरन्तरता पाउनुपर्छ र विश्व विकासको कदमले सार्थकता पाउनुपर्छ ।

सन् २०२५ ले युद्ध र हिंसाजस्ता मानवीय व्यभिचारका कारण उत्पन्न दुर्भावनालाई नियन्त्रण गर्नेछ र जलवायु परिवर्तनसँगै निम्तिएका खडेरी, अनावृष्टि, अल्पवृष्टि, अतिवृष्टि र यसका कारण हुने मरूभूमिकरण, बाढी र पहिरोजस्ता प्राकृतिक विपत्ति न्यूनीकरण र नियन्त्रणमा विश्वले सहकार्य गर्नेछ । मानवीय गतिविधिले निम्त्याउने रोग तथा महामारीजन्य विपत्तिलाई आधुनिक विज्ञानको आविष्कार र सहयोगमा परास्त गर्दै हामीलाई यस प्रकृतिको अनुपम उपहार यस पवित्र धर्तीमा निर्भिकताका साथ बाँच्न पाउने अधिकारको सुनिश्चितता गर्नेछ ।

सन् २०२४ को अन्त्यसँगै वर्षभरि प्रविधि विकास र प्राकृतिक समस्या समाधान प्रयासमा भएका प्रमुख गतिविधि र घटनालाई सम्झिनु सन् २०२४ को बिदाइका लागि सान्दर्भिक हुनेछ ।

-अन्तरिक्ष दौड-

सन् २०२४ मा अन्तरिक्षको दौडले विगतमा जस्तै निरन्तरता पाएको छ । सन् २०२४ मा अन्तरिक्ष अन्वेषणमा जापानले जनवरीमा चन्द्रमाको क्रेटरमा स्लिम 'स्मार्ट ल्यान्डर फर इन्भेस्टिगेसन द मुन' अवतरण गरी तीन महिनासम्म पृथ्वीमा तथ्याङ्क प्रेषित गर्न सफल भयो ।

चीनको एउटा अन्तरीक्ष अभियानले चन्द्रमाको सबैभन्दा टाढाबाट माटोको नमूना लिएर फिर्ता भयो । चीनले अहिलेसम्म कोही पनि नपुगेको चन्द्रमाको सुदूर क्षेत्रमा आफ्नो अन्तरिक्षयान अवतरण गरेको हो । मे ३ मा प्रक्षेपण गरिएको चाङ्ग-अ सिक्स नाम दिइएको चिनियाँ अभियानले चन्द्रमाको 'क्रेटर' अर्थात् विशाल खाडलमा रहेका पुराना चट्टान र माटो सङ्कलन गरेको हो ।

नासाको पर्सिभेरेन्स रोभरले मङ्गल ग्रहमा सूक्ष्मजीवी 'माइक्रोबियल' जीवनको सम्भावित प्रमाण फेला पारेको छ ।

यो वर्ष ईयू-जापान अन्तरिक्ष अभियानले बुध ग्रहको दक्षिणी ध्रुवको तस्वीर लिन सफल भएको छ । स्पेसएक्सले 'चपस्टिक आर्म्स' को साथ 'रिटर्निंग बूस्टर रकेट'हरू कब्जा गर्नका लागि एक नयाँ प्रविधिको आविष्कार गरेको छ । त्यसैगरी, बोइङको स्टारलाइनर परियोजनाले जुनमा दुई अन्तरिक्ष यात्रीलाई अन्तर्राष्ट्रिय अन्तरिक्ष स्टेशनमा पठाएको थियो । उनीहरू त्यहाँ दुई महिनाका लागि बस्ने भनिएको भए पनि प्राविधिक समस्याले उनीहरू फिर्ता हुन ढिलाइ भएको छ ।

अन्तर्राष्ट्रिय अन्तरिक्ष स्टेसनमा फसेका दुई अन्तरिक्षयात्रीलाई पृथ्वीमा फर्काउने 'स्पेसएक्स मिसन'को 'ड्र्यागन क्याप्सुल' इनटरनेसनल स्पेस स्टेसन 'आइएसएस'सँग जोडिएको छ ।

'ड्र्यागन क्याप्सुल'ले आइएसएससँग जोडिएपछि नासाका अन्तरिक्ष यात्री निक हेग र रुसी अन्तरिक्षयात्री अलेक्जेन्डर गोर्बुनोभ फेब्रुअरीमा अन्तरिक्ष स्टेसनबाट फर्किंदा उनीहरूले अन्तरिक्षविद् विलियम्स र बुच विल्मोरलाई फिर्ता ल्याउनेछन् ।

दुर्भाग्यको कुरा, अन्तरिक्ष पनि केवल व्यावसायिक र वैज्ञानिक प्रतिस्पर्धाको विषय बन्न थालेको छ । यो प्रकृतिमाथिको हस्तक्षेप हो । यो नयाँ भूराजनीतिक प्रतिस्पर्धाको कारण निम्तिएको परिणाम हो ।

अमेरिकी अधिकारीहरूले गत मे महिनामा रूसले अन्तरिक्षमा रहेको 'एन्टी स्याटेलाइट' हतियार अन्तरिक्षमा राखेको आरोप लगाएका थिए । यसैबीच चीनले अन्तरिक्षमा रहेका सैन्य उपग्रहको सङ्ख्यामा व्यापक वृद्धि गरेको छ । अन्तरिक्ष सञ्चालनलाई नियन्त्रण गर्ने केही अन्तर्राष्ट्रिय सम्झौताहरूले अन्तरिक्षको सैन्यीकरणलाई रोक्न खासै केही गर्दैन । संयुक्त राज्य अमेरिकाले देशहरूलाई 'आर्टेमिस सम्झौता'मा हस्ताक्षर गर्न आग्रह गरिरहेको छ, जसले अन्तरिक्ष अन्वेषणको सैन्यीकरणलाई रोक्न चाहन्छ । यो सम्झौतामा अहिलेसम्म ५२ देशले हस्ताक्षर गरेका छन् तर यो सूचीमा चीन, रूसलगायतका अमेरिका इतर मुलुकहरू समावेश छैनन् ।

- एआईको विकास -

नेपालीमा कृत्रिम बौद्धिकता भनिने आर्टिफिसियल इन्टेलिजेन्स 'एआई' मा विकासहरू आश्चर्यजनक तथ्य सङ्कलनका लागि बृहत् फड्को त हो नै सँगसँगै यो चिन्ताको पनि विषय हो । एआई क्रान्तिले विज्ञानका कथालाई तथ्यमा बदलिरहेको छ । हालको एआई प्रगतिहरूको सूची प्रभावशाली छ, उनीहरूको व्यावहारिक अनुप्रयोगहरू छन् । एआईको प्रयोग आनुवंशिक अवस्थाको विश्लेषण गर्न, स्वास्थ्य सेवासुधार गर्न, उत्पादन क्षमता सिर्जना गर्न र अन्य धेरैका लागि प्रयोग भइरहेको छ ।

नोबेल पुरस्कार समितिले जोन हपफिल्ड र जियोफ्रे हिन्टनलाई 'कृत्रिम तन्त्रिका सञ्जालको मेशिनबाट जानकारी प्राप्त गर्ने वा गणना गर्न सक्षम आधारभूत खोज र आविष्कारहरूको लागि' र रसायन शास्त्रमा नोबेल पुरस्कारको आधा हिस्सा डेमिस हसाबिस र जोन जम्परलाई 'प्रोटिनकको स्ट्रक्चरल प्रेडिक्सन' का लागि एआई मोडेल विकास गरेको तथ्यबाट एआईको महत्त्वले आधिकारिक मान्यता प्राप्त गरेको छ ।

पुरस्कारको आधा हिस्सा नितान्त नयाँ प्रकारको 'प्रोटिन'को विकास गरेका डेभिड बेकरले प्राप्त गरेका थिए भने बाँकी आधा 'प्रोटिन'को जटिल ढाँचालाई एआईको मद्दतले मापन गर्ने मोडेल विकास गरेका जम्पर र हसाबिसले पाएका थिए ।

सबै विकशित प्रविधिहरूमा कुन देश अगाडि छ भनेर विशेषज्ञहरूले बहस गर्छन् । प्रायजसो उपायहरूले संयुक्त राज्य अमेरिका 'ठूलो अन्तरले अघि बढेको' देखाउँछ तथापि, चीन एआई अनुसन्धान प्रकाशनहरूको अनाधिकारिक सङ्ख्याका लागि विश्वव्यापीरूपमा अग्रस्थानमा रहेको देखिन्छ ।

हरेक आकांक्षी एआईको शक्तिले सामना गर्ने एउटा सीमा भनेको दक्ष कामदार हरूको उपलब्धता हो । अर्को अवरोध भनेको बिजुली र पानीको उपलब्धता हो । एआई मोडेलका उपकरणका लागि ठूलो मात्रामा इन्धन शक्तिको आवश्यकता पर्दछ जसले सधैं चिसो रहिरहन आवश्यक वातावरणमा ताप उत्पन्न गर्दछ र वातावरणीय सन्तुलनका प्रभाव पार्दछ ।

एआई क्षेत्रमा प्रवेशको उच्च लागत समानताका विषयमा चिन्ताको एक कारण हो एआई विकासमा देखिएको होडबाजीले धनी र गरीब देशहरू बीचको खाडललाई अझ फराकिलो बनाउनेछ ।

आर्टिफिसियल इन्टेलिजेन्सलाई कसरी नियमन गर्ने भन्ने विषयमा छलफल भइरहेको छ । समग्रमा सम्झौता गर्ने कुरा एउटा जटिल अभ्यास हुनेछ ।

जलवायु परिवर्तनका कारण तापमान वृद्धि हुने क्रम जारी छ । यसका लागि प्रकृतिमा मानवीय अतिक्रमणलाई नै प्रमुख जिम्मेवार मानिएको छ । जीवाश्म इन्धनको हाम्रो व्यवहारले सम्भवतः स्थायी रूपमा जलवायुलाई परिवर्तन गर्ने तथ्यलाई वैज्ञानिकहरूले दशकौंदेखि चेतावनी दिइरहेका छन् । आधुनिक अभ्यासका लागि वैज्ञानिक आविष्कार नै पनि यसमा जिम्मेवार छन् । तथ्यहरूले उल्लेखित दावीहरूलाई पुष्टि गर्छन् ।

वायुमण्डलमा कार्बन डाइअक्साइडको स्तर निरन्तर बढिरहेको छ र सन् २०२४ रेकर्डमा सबैभन्दा तातो वर्षको रूपमा स्थापित भएको छ । सन् २०१५ को पेरिस सम्झौताले विश्वलाई स्थायी रूपमा तापक्रमको उच्चस्तर नाघ्नबाट जोगाउने प्रयास गरेको सन्दर्भमा जलवायु परिवर्तनको जोखिम तथा असरलाई उल्लेखनीय रूपमा घटाउने कुरालाई आत्मसात गरेको थियो । सम्झौताले विश्वव्यापी औसत तापक्रममा हुने वृद्धिलाई पूर्व औद्योगिक तहभन्दा माथि दुई डिग्री सेल्सियसभन्दा तल कायम राख्ने र तापक्रममा हुने वृद्धिलाई पूर्व औद्योगिक तहभन्दा माथि १.५ डिग्री सेल्सियसमा सीमित राख्न प्रयास गर्ने जनाएको छ ।

बदलिँदो जलवायुका केही परिणामहरू सजिलै देख्न सकिन्छ । अमेरिकी राष्ट्रिय महासागरीय तथा वायुमण्डलीय प्रशासनले सन् २०२४ को पहिलो १० महिनामा संयुक्त राज्य अमेरिकामा २४ वटा मौसमसम्बन्धी प्राकृतिक प्रकोप उत्पन्न भएको र यसबाट कम्तीमा एक अर्ब अमेरिकी डलरबराबरको क्षति भएको जनाएको छ । दक्षिण अमेरिकाको उत्तरी क्षेत्रमा खडेरीका कारण विश्वको सबैभन्दा ठूलो नदी प्रणाली अमेजनको केही भाग सुकेको छ । वातावरणीय परिवर्तनहरू क्रमिक रूपमा हुने गर्छन् जलवायु परिवर्तनका धेरै परिणामहरू देख्न गाह्रो छ । समुद्रको तातो पानी सोस्ने स्रोतहरूमा हस्तक्षेप भएको छ तर यसको परिणाम देख्ने गरी जानकारीमा आउन निकै समय लाग्न सक्छ ।

जलवायुसम्बन्धी वार्षिक अन्तर्राष्ट्रिय सम्मेलन कोप २९ ले विकासशील देशहरूलाई उत्सर्जन कटौती र जलवायु अनुकूलनका लागि आर्थिक सहयोग गर्न सामान्य प्रगति गरेको छ । वैज्ञानिकहरूले जलवायु परिवर्तनको प्रभावलाई कम गर्न र हरित अर्थव्यवस्थामा सङ्क्रमणलाई छिटो गर्न डिजाइन गरिएका विभिन्न प्रविधिहरूमा प्रगति गरेका छन् । तथापि, तिनीहरूको सफलता धेरै कम र ढिलो हुन सक्छ । दिलीप शर्मा / रासस

## २०२५ देखि जन्मिनेलाई "जेन बेटा" भनिने

काठमाडौं । जेनेरेसन अल्फा र जेनेरेसन जेडपछि अब आउने नयाँ पुस्तालाई जेनेरेसन बेटा भनिनेछ । २०२५ देखि २०३९ को बीचमा जन्मिने बच्चाबच्ची यो पुस्तामा समेटिनेछन् । प्रविधि क्षेत्रमा भएको तीव्र प्रगति, सामाजिक चुनौती र विश्वव्यापी परिवर्तनको आकार लिने संसारमा हुर्किने भएकाले यस पुस्तालाई जेनेरेसन अर्थात् जेन बेटाले परिभाषित गरिएको हो ।

जेनेरेसन अल्फा (२०१०-२०२४ मा जन्मिएका) को पाइला पछ्याउँदै यी बालबालिका प्रविधि, दिगोपन र विश्वव्यापी परिदृश्यमा अभूतपूर्व परिवर्तनहरूको साक्षी बन्नेछन् ।

जेनेरेसन बेटा को हुन् ?

सामाजिक अनुसन्धानकर्ता मार्क म्याक्रिन्डलले जेनेरेसन अल्फा शब्दको सिर्जना गरेका थिए । सन् २०३५ सम्ममा जेनेरेसन बेटाले विश्वव्यापी जनसङ्ख्याको १६ प्रतिशत भाग ओगट्ने उनले भविष्यवाणी गरेका छन् । यी बालबालिका मुख्यतः युवा जेनेरेसन वाई (मिलेनियल्स १९८१-१९९६ मा जन्मिएका) र पुराना जेनेरेसन जेड (१९९६-२०१०) का अभिभावकबाट जन्मनेछन् । जेनेरेसन वाई र जेनेरेसन जेड डिजिटल युग र सामाजिक सञ्जालको उदयसँगै पहिले नै अनुकूलित भइसकेको पुस्ता हुन् ।

"जेनरेसन अल्फाले स्मार्ट प्रविधि र एआईको उदय अनुभव गरेको छ । जेनरेसन बेटा यस्तो युगमा बाँच्नेछ, जहाँ शिक्षा, कार्यक्षेत्र, स्वास्थ्य सेवा, मनोरञ्जनजस्ता सबै पक्ष पूर्ण रूपमा एआईमय हुनेछन्," म्याकक्रिन्डलले आफ्नो ब्लग पोस्टमा उल्लेख गरेका छन् । यता जेनेरेसन बेटा भने अझ बढी इन्टरकनेक्टेड र स्वचालित वातावरणमा हुर्किनेछन् । यसमा एआई, मसिन लर्निङ, स्वचालित जीवन र दिगोपनको प्रयासले आकार दिनेछन् ।

जेनेरेसन बेटाका मुख्य विशेषताहरू

१. प्रविधिको एकीकरण

जेनेरेसन बेटा आर्टिफिसियल इन्टेलिजेन्स र स्वचालित संसारमा डुबेर हुर्किनेछ । यी प्रविधिहरू शिक्षा, स्वास्थ्य सेवा, मनोरञ्जन र कार्यक्षेत्रमा आधारभूत हुनेछन् । यसले उनीहरूको सिकाइ, काम गर्ने तरिका र अन्तर्क्रिया गर्ने शैलीलाई मौलिक रूपमा परिवर्तन गर्नेछ ।

२. दीर्घ जीवन

स्वास्थ्य सेवा र दीर्घायु प्रविधिमा भएको प्रगतिले गर्दा यस अवधिमा जन्मिने धेरै बालबालिका २२औं शताब्दीमा राम्रोसँग बाँच्ने अपेक्षा गरिएको छ । लामो समय बाँच्न सक्ने क्षमताले संसारमा नयाँ चुनौती र अवसर लिएर आउनेछ ।

३. दिगोपनको प्राथमिकता

जलवायु परिवर्तन, जनसङ्ख्याको विश्वव्यापी परिवर्तन र स्रोतहरूको समाप्ति जस्ता सामाजिक चुनौतीले जेनेरेसन बेटाले सामना गर्ने मुख्य मुद्दाहरू परिभाषित गर्नेछन् । दिगोपन कुनै रोजाइ नभई अनिवार्यता हुनेछ, जसले उनीहरूको उपभोग, जीवनशैली र कार्यशैलीमा प्रभाव पार्नेछ ।

४. विश्वव्यापी प्रभाव

यो पुस्ता बढ्दै जाँदा तिनीहरूको मूल्य र निर्णयले विश्वव्यापी अर्थतन्त्र, संस्कृति र उद्योगलाई महत्त्वपूर्ण रूपमा प्रभावित गर्नेछन् । सङ्ख्या बढ्दै जाँदा उनीहरू प्रविधि, समाज र नीतिमा भविष्यका प्रवृत्तिहरूलाई आकार दिने मुख्य जनसांख्यिकीय समूह बन्नेछन् ।

जेनेरेसन बेटाले उच्च प्रविधियुक्त संसारको अनुभव गर्नेछन् । यसमा खासगरी स्मार्ट सहर, स्वचालित गाडी र अत्याधुनिक भर्चुअल रियालिटी समावेश हुनेछन् । एआईद्वारा सञ्चालित यन्त्रमा आधारित शिक्षण र ब्लकचेन जस्ता प्रविधिले नयाँ पुस्ताको जीवनका हरेक क्षेत्रमा असर पुर्याउनेछ । यसले उनीहरूको पढाइ र कामलाई अझ बढी व्यक्तिगत र सजिलो बनाउन मद्दत गर्ने अपेक्षा गरिएको छ ।

परिवर्तनशील संसारमा जेनेरेसन बेटाले दिगोपनका चुनौतीको सामना गर्नुपर्ने हुन्छ भने सँगै उदाइरहेका प्रविधिलाई बढीभन्दा बढी उपयोग गर्नुपर्नेछ । प्रविधिमा भएको प्रगति, वातावरण जोगाउने जिम्मेवारी र समाजमा हुने परिवर्तनको मिश्रणले भविष्यमा यस पुस्ताको पहिचान र प्रभाव निर्धारण गर्नेछ ।

## साइबर आक्रमणमा चीनको संलग्नता-अमेरिका

काठमाडौं । चिनियाँ ह्याकरहरूको समूहले अमेरिकी अर्थ मन्त्रालयको कम्प्युटर प्रणालीमा अनधिकृत रूपमा प्रवेश गरी संवेदनशील कागजात चोरेको आरोप लागेको छ । सोमबार मन्त्रालयका अधिकारीहरूले संसदलाई पठाएको पत्रमा यस्तो दाबी गरिएको हो । समाचार एजेन्सी रोयटर्सका अनुसार ह्याकरले अमेरिकी अर्थ मन्त्रालयका लागि साइबर सुरक्षाको क्षेत्रमा काम गर्ने कम्पनी 'बियोन्ड ट्रस्ट'को सिस्टम कब्जा गरी पहुँच बनाएका थिए । सिस्टम कब्जा गरेपछि तत्कालै त्यसलाई अफलाइन गरिएको थियो भने त्यसपछि थप आक्रमण भएको कुनै प्रमाण नभेटिएको जनाइएको छ ।

संसदलाई पठाइएको पत्र अनुसार चीन सरकार संरक्षित ह्याकरले बियोन्ड ट्रस्टको एउटा प्रमुख सेक्युरिटी की मा पहुँच पाएका थिए । जुन विक्रेताले क्लाउडमा आधारित सेवाको सुरक्षाका लागि प्रयोग गर्ने गरेको थियो । यो सेवा मन्त्रालयको 'कोष विभाग' (ट्रेजरी डिपार्टमेन्ट) कार्यालयका प्रयोगकर्तालाई प्राविधिक सहयोग दिने उद्देश्यले प्रयोग हुन्थ्यो । उक्त की चोरेर ह्याकरले सो सेवाको सुरक्षा प्रबन्धलाई छलेर कोष विभागका प्रयोगकर्ताको कम्प्युटरमा पहुँच पाएको जनाइएको छ ।

ती ह्याकरहरूले कार्यालयका प्रयोगकर्ताले राखेका केही संवेदनशील कागजात चोरी गरेको आरोप लगाइएको छ । विभागलाई यसअघि नै ८ डिसेम्बरमा बियोन्ड ट्रस्टले आक्रमणबारे जानकारी दिएको थियो । चिनियाँ ह्याकरले यसै महिना अमेरिकाका तीन ठुला टेलिकम कम्पनीको सिस्टम ह्याक गरेको घटनापछि यो अर्को हमला भएको हो । 'साल्ट टाइफुन' भनिने उक्त घटनामा ह्याकरहरूले सांसदहरूको टेलिफोन वार्ता र टेक्स्ट मेसेजमा पहुँच पाएको दाबी गरिएको छ । सांसदले यस ह्याकिङ घटनाको चर्को आलोचना गरेका छन् । बियोन्ड ट्रस्टले दिएको जानकारीपछि 'कोष विभाग'ले साइबर सुरक्षा तथा पूर्वाधार सुरक्षा एजेन्सी (सीआईसीए), सङ्घीय अनुसन्धान ब्युरो (एफबीआई) र तेस्रो पक्षका फरेन्सिक अनुसन्धानकर्तासँग सम्पर्क गरेर घटनाको प्रभाव पत्ता लगाउने काम थालेको द गार्डियनले उल्लेख गरेको छ ।

प्रारम्भिक चरणमा यस आक्रमणले कति असर पारेको छ भन्ने जानकारी आइसकेको छैन । कोष विभागले थप विवरण ३० दिनभित्र एक पूरक प्रतिवेदनमार्फत उपलब्ध गराइसक्नु पर्ने बताइएको छ । "हाम्रा प्रणाली र यसले राख्ने डेटा विरुद्धका सबै खाले खतरालाई कोष विभागले गम्भीरताका साथ लिएको छ," कोष विभागका प्रवक्ताले भनेका छन्, "पछिल्लो चार वर्षमा कोष विभागले आफ्नो साइबर सुरक्षामा उल्लेखनीय सुधार गरेको छ । र हामी निजी तथा सार्वजनिक क्षेत्रका साझेदारहरूसँग मिलेर हाम्रो वित्तीय प्रणालीलाई खतराबाट जोगाउन निरन्तर काम गरिरहनेछौं ।"

बियोन्ड ट्रस्टले आफ्नो वेबसाइटमा उल्लेख गरे अनुसार हालैको सुरक्षा घटनामा यसको रिमोट सपोर्ट सफ्टवेयरका सीमित ग्राहकहरू प्रभावित भएका थिए । वाशिङटन स्थित चिनियाँ दूतावासका प्रवक्ताले यस ह्याकिङको घटनामा चीनको कुनै संलग्नता नभएको दाबी गर्दै जिम्मेवारी लिन अस्वीकार गरेका छन् । रोयटर्सलाई जवाफ दिँदै उनले भनेका छन्, "बेइजिङले तथ्यगत आधार बिना चीनलाई दोष लगाउने अमेरिकी दुष्प्रचारको कडा विरोध

# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### विद्वता स्वदेशमै प्रयोग गर- नारा होइन !

अहिले देशमा बेरोजगारीको अवस्था भयावह रुपमा बढेको छ । देशका युवाहरुको विदेश पलायन रोकिएको छैन । नेपाली युवाहरु कामको खोजीमा विदेश पलायन भइरहेका छन् भने नेपाली विद्यार्थीहरु पनि उच्च शिक्षाको लागि विदेश जाने प्रवृति बढिरहेको छ । यसै समय त्रिभुवन विश्वविद्यालयबाट एकैपटक १४ हजार विद्यार्थी दीक्षित बनेका छन् ।

त्रिविको स्वर्ण दीक्षान्तमा १४ हजार ३ सय ७ विद्यार्थी दीक्षित भए । त्रिवि, पूर्वाञ्चल, काठमाडौं, पोखरालगायतका विश्वविद्यालयबाट प्रत्येक वर्ष हजारौं विद्यार्थी दीक्षित बनिरहेका छन् । यो विद्वत् युवाशक्तिलाई राज्यले सही ठाउँमा उपयोग गर्न सकेको छैन । स्वदेशमा पर्याप्त रोजगारी नहुँदा अवसरको खोजीमा यो वर्ग विदेशिन बाध्य छ । विश्वविद्यालयबाट बर्सेनि हजारौं जनशक्ति उत्पादन भएपनि राज्यले त्यसको सही सदुपयोग गर्न सकेको छैन । सीमित व्यक्तिले मात्र सरकारी सेवामा प्रवेशको अवसर पाउँछन् । व्यापार, व्यवसाय, उद्योग र कलकारखाना नहुँदा यो जनशक्ति बाध्यतावश पलायन भइरहेको छ ।

राज्यको उपयुक्त नीति अभावमा उच्च शिक्षा हासिल गरेको युवाले आफैं उद्यममा लाग्न आनाकानी गरिरहेको छ । सीमित युवा मात्र उद्यमशीलतामा लागेका छन् । उद्यमी बनेका बहुसंख्यक युवा पुर्खाको बिँडो थाम्नेहरू छन् । देशको आर्थिक विकास र समृद्धिका लागि राजनीतिक भाषण होइन, यो जनशक्तिको उपयोग गर्ने नीति आवश्यक छ ।

दीक्षान्त समारोहमा बोल्दै प्रधानमन्त्री केपी शर्मा ओलीले आफूसँग भएको विद्या व्यवहारमा उतार्न नसकिए त्यो विद्या कुनै कामको नहुने बताए । तर तिनै सरोकारवाला निकायमा विराजमान व्यक्तिले व्यवहारमा उतार्ने गरी वातावरण भने मिलाउन सकिरहेका छैनन् । किनकी यो राज्यको दायित्व हो ।

त्यस्तैले राज्यले सही नीति लिएन भने यी कालोकोट लगाउनेहरूको निर्विकल्प गन्तव्य भनेको विदेश हुनेछ । र, भविष्यमा विद्यालय र विश्वविद्यालयमा पढाउने जनशक्ति समेत पाउन कठिन हुनेछ । जुन, अहिले नै अभाव देखिन थालिसकेको छ । तर पनि राज्यसत्तामा बस्ने नेताहरुको भनाई भने जहिले पनि नेपाली विद्यार्थीहरुको विदेश पलायन रोक्ने र देशमै राजगारको सिर्जना गरेर बेरोजगारी समस्या हटाउने प्रतिबद्धता व्यक्त गर्दै कहिल्यै नथाक्ने नेताहरुले भने देशमा सही नीति बनाउन भने चाहेको देखिदैन । तसर्थ अरुलाई उपदेश दिने नेताहरुले आफ्नो देशमा सुशासन र समृद्धि कायम गर्न राजनीतिक दलहरुले आफ्नो दायित्व इमान्दारीका साथ निभाउन सकेका छन् त ? भनिन्छ उपदृश जहिले पनि तितो हुन्छ । सायद यो नेपालको बस्तु परिस्थितिलाई बुझेर नै यस प्रकारको भनाई बर्तमान समयमा सान्दर्भिक देखिएको पनि हुन सक्दछ । तसर्थ सबैले दायित्वबोधका साथ अभिव्यक्ति दिनु राम्रो होला । त्यो पनि जिम्मेवार निकायमा बसेर । तसर्थ विद्वतालाई स्वदेशमै प्रयोग गर- नारा होइन ।

# नेतामाथि सरकारको विभेदः एउटालाई उक्साउने, अर्कोलाई डुबाउने !

● भेषराज पोखरेल

सरकारले कर दिवसको अवसरमा धेरै कर तिर्ने व्यवसायीहरुलाई सम्मान गर्यो । भाटभटेनी सुपरमार्केटका साहु मीनबहादुर गुरुङ्ग पनि सरकारद्धारा सम्मानित भए । उनले दुई अर्बभन्दा बढी राजश्व छलेको र सो राजश्व उनले राज्यलाई तिर्नुपर्ने भनि सर्वोच्च अदालतले फैसला गरेको छ ।

यता, वालुवाटारस्थित ललिता निवास जग्गा हिनामिना प्रकरणमा उनी विशेष अदालतबाट दोषी ठहर भएका छन् । उनलाई विशेषले दुई वर्ष कैद र ८० लाख रुपैयाँ जरिवाना तोकेको छ । सर्वोच्च र विशेषको आदेशलाई नजरअन्दाज गर्दै सरकारले उनलाई सम्मान गर्यो । सर्वोच्चले राजश्व तिर भनिसकेको छ, तैपनि सरकारले उठाउन चासो देखाएको छैन् ।

उल्टै सम्मान गर्छ । भाटभटेनीले राजश्व छलेको सर्वसाधारणले देखेका छन्, सरकारले किन देख्दैन् ? राजश्व छल्नेलाई सम्मान गर्ने होइन्, कारबाही गर । भाटभटेनीलगायत मुलुकमा सञ्चालित सुपरमार्केटहरुले भ्याट बिल दिँदैनन् । भ्याट बिल नदिएपछि राजश्व छलियो । भाटभटेनीमा सामान किन्ने जानेहरुले प्याकेटमा जति लेखेको छ, त्यति तिर्छन् ।

उनीहरु स्वयंले लेखेर राखेका हुन्छन् । त्यो सामानको परिमाण पुगेको छ कि छैन् भन्ने पनि सर्वसाधारणलाई थाहा हुँदैन् । यता, भाटभटेनीले कुहिएको सामान पनि बेच्दै आएको छ । केही समयअघि मात्र काठमाडौं महानगरपालिकाले कुहिएको नरिवल बेच्ने भाटभटेनीलाई कारबाही गरेको थियो ।

भाटभटेनीको गेटभित्र छिर्नेबित्तिकै सडेगलेका तरकारी, फलफूलहरु देख्न सकिन्छ । अन्य सुपरमार्केटको हकमा पनि त्यस्तै छ । भाटभटेनीले कस्तो सामान बेचिरहेको छ ? सरोकारवाला निकायले अनुगमन गर्दैन् । यता, सर्वसाधारण पनि भाटभटेनी भन्नेबित्तिकै हुरुक्कै ।

भाटभटेनी जानु कहाँ-कहाँ नै जानुझैं गर्छन् । उनीहरुको रवाफ नै छुट्दै देखिन्छ । तर, कतै आफ्नो पैसा त खेर गइरहेको छैन् ? कतै आफू ठगिएको त छैनौं ? उपभोक्तालाई थाहा छैन् । अनामनगरस्थित भाटभटेनीबाहिर मेला लगाइएको छ । फुटपाथसँगै जोडिएको पेटीमा उनीहरुले लुगा बेच्न राखिएको छ ।

भाटभटेनीका कर्मचारीहरु लुगा किन्नुस भन्दै हात नै समाउन आउँछन् । भाटभटेनी पनि फुटपाथ व्यवसायमा झरेछ भनेर सर्वसाधारण कुरा गरिरहेको सुनिन्थ्यो । एक जना उपभोक्ताले वासिङ गरेर ल्याएको सेकेण्ड ह्याण्ड लुगासमेत भन्न भ्याएकी थिइन् । भाटभटेनीले कुहिएको सामान बेच्छ भन्ने त सर्वसाधारणले थाहा पाइसके ।

त्यही भएर पनि पहिलेभन्दा अहिले अलिक चाप कम भएको होकि जस्तो देखिन्छ । नत्र भाटभटेनीलाई सडक व्यापार गर्नुपर्ने के आवश्यकता ? भाटभटेनीले कर मात्र छल्दैन्, सामान बेच्ने व्यापारीको समेत पैसा पचाइरहेको छ । यो पोल त केही वर्षअगाडि नै खुलिसकेको छ ।

भाटभटेनीमा उधारो चल्दैन् । सामान लिनेबित्तिकै पेमेण्ट गरिहाल्नुपर्छ । उपभोक्ताबाट लिईहाल्ने भाटभटेनीलाई ससाना उद्योगी, व्यापारीलाई पैसा दिनचाँहि केको टण्टला ? देशभर ३१ वटा भाटभटेनी सञ्चालनमा छ । भाटभटेनी साहु गुरुङ्गले विभिन्न बैंकबाट अर्बौं रुपैयाँ कर्जा लिएका छन् ।

बैंकको पैसा जनताको पैसा हो । बैंकहरुले आँखा चिम्लेर एउटै व्यक्तिमाथि अर्बौं रुपैयाँ लगानी गरेका छन् । मेडिकल व्यवसायी दुर्गा प्रसाईंका कारण बैंक नै संकटमा पर्ने देखिएको छ । अदालतले विराटनगरस्थित प्रसाईंको अस्पताल बेच्न स्वीकृति दिएको छ । एउटै बैंकको त्यहाँ दुई अर्ब लगानी रहेको बताइन्छ ।

अन्य बैंकको पनि त्यहाँ अर्बौं लगानी छ । त्यो अस्पताल बेचेर पनि त्यत्रो पैसा उठ्न सक्दैन् । अस्पताल बिक्री गरेर बैंकले पैसा उठाउन सकेन् भने बचतकर्ता सक्किन्छन् । प्रसाईं, भाटभटेनी साहुलगायत केही ठूला व्यवसायीले बैंक कब्जा गरेका छन् । बैंकका सञ्चालकलाई घुस खान दिएर उनीहरुले भकाभक कर्जा लिए ।

सर्वसाधारणलाई बैंकले कहिले ऋण नै पत्याएन् । सानो उद्योग खोल्छु, स्वदेशमै व्यवसायी गर्छु भन्नेलाई बैंकले फुट्या कौडी पनि दिएन् । जसको असर विस्तारै बैंकमा देखिने छ । भाटभटेनी साहुको पहुँच कहाँसम्म छ ? एउटै उदाहरण काफी छ । भक्तपुरको राधेराधेस्थित भाटभटेनी स्टोर छ । त्यसकै सामुन्ने एउटा भवन निर्माणाधीन छ । त्यो भवन खण्डहर बन्दै गएको छ । झण्डै दुई दशकअघि ठड्याइएको भवन अहिलेसम्म पनि बनेको छैन् । किन कि स्थानीय तहले स्वीकृति नै दिएन् । त्यो भवनमा लगानी गर्ने त चुलुम्मै डुबे । भवन पुरानो बन्दै गएको छ । भवनको हकमा के गर्ने ? सरकारले कुनै निर्णय गर्न सकेको छैन् ।

त्यही भवनअगाडि भाटभटेनी स्टोर छ । भाटभटेनी स्टोरले स्वीकृति पाउने, त्यो भवन बनाउनेले किन नपाउने ? प्रश्न उठेको छ । नागरिकमाथि भेदभाव गर्न मिल्छ ? राजनीतिक पहुँच भएकालाई यहाँ जे गर्नपनि छुट ? राज्यले एउटालाई उक्सायो, अर्कोलाई डुबायो । यहाँ त चन्दाको आधारमा निर्णय गरिन्छ ।

राजश्व छल्ने, सरकारी तथा गुठीको जग्गा दर्ता गर्नेहरु मात्र यो देशमा माथि आएका छन् । सीधासाधीलाई त यहाँ सास लिन पनि गाह्रो छ । विगतको तुलनामा भाटभटेनीको व्यापार घटेको देखिन्छ । देशमा देखिएको आर्थिक मन्दी र मँहगो सामानका कारण पनि त्यहाँ सामान किन्ने घटेको हुनसक्छ ।

भाटभटेनीमा मन्दी आयो भने यसको डाइरेक्ट असर बैंकमा पर्छ । किन कि देशका क वर्गका बैंकहरुले त्यहाँ कर्जा लगानी गरेका छन् । एउटै व्यवसायीमाथि अर्बौं लगानी गर्दा नेपाल राष्ट्र बैंक टुलुटुलु रमिता हेरेर बस्छ । हुन त सरकार नै दलाली छ । सर्वसाधारणलाई सबैभन्दा धेरै पीडा सरकारले नै दिएको छ ।

अघिल्लो महिनासम्म राष्ट्र बैंकले कर्णाली डेभलपमेण्ट बैंक ठीकठाक अवस्थामा छ भनेर ठोकुवा गरिरहेको थियो । एक महिना बित्न नपाउँदै राष्ट्र बैंकले सो बैंकलाई समस्याग्रस्त घोषणा गर्यो । सरकारले कतिसम्म जनतालाई ढाँट्दो रहेछ ? यस घटनाबाट घामझैं छर्लङ्ग भएको छ ।

अहिले बैंकले लिलाम गरेको धितो सकार्ने मान्छे छैनन् । बैंकहरुलाई नै धितो 'निल्नु न ओकाल्नु' भएको छ । ठूल्ठूला व्यवसायीमाथि गरिएको लगानी डुब्न सक्छ । सरकारले धितो लिलाम गर्ला । तर, कसले किन्छ धितो ? जनतासँग पैसा हुनुपरेन् । देशमा दिनानुदिन आर्थिक संकट बढ्दै गएको छ ।

तैपनि सरकारले ख्यालख्याल गरिरहेको छ । वास्तवमा भन्ने हो भने जनताको पैसामाथि सरकार कहिलेपनि जिम्मेवार भएन् । जनताको दुःखको कमाइ हो भन्ने सरकारले कहिले सोचेन् । कुन बैंकले कति कर्जा लगानी गर्यो ? कुन बैंकमा धेरै पैसा आयो ? कसले वार्षिक धेरै नाफा कमायो ? सरकार यसैमा केन्द्रीत भयो ।

भविष्यमा यसले ठूलै हानिनोक्सानी पुर्याउने देखिएको छ । २०६८ सालमा सुधीर बस्नेतको ओरिएन्टल सहकारी डुब्यो । सो सहकारीबाट लाखौं पीडित बने । त्यतिबेलै सरकारले सहकारीमाथि नियमन बढाएको भए आज करोडौं बचतकर्ताको बिल्लीबाठ हुँदैन्थ्यो । सरकारले उत्पादनमूलक क्षेत्रमा लगानी गर्नुपर्ने नियम बनाउनुपर्थ्यो ।

कडाइका साथ कार्यान्वयन गर्नुपर्थ्यो । तर, सरकार टुलुटुलु रमिता हेरेर बस्यो । यसको क्षति सरकारलाई भएन्, तर बचतकर्तालाई ठूलो भयो । अहिले एउटा बैंक समस्याग्रस्त भएको छ । यो रोग विस्तारै अन्यमा सर्छ । अनि सरकारले के गर्छ ?

नेपालबहस

# पहिरोले बिच्छेद् तुल्याएको किरात धार्मिक क्षेत्र सानो हात्तीवन





गणेश राई

ललितपुर। किरात जातिको उधौली पूजा तिथिमिति अब दुई साता बाँकी छ। काठमाडौं उपत्यकामा रहेका किरातीहरूले सामुहिक रूपमा भेला भएर पुजा गर्ने थलो सानो हात्तीवनस्थित पूजास्थल किरात माङहिम (देवस्थल) क्षेत्र पहिरोले क्षतिग्रस्त छ। गत असोज दोस्रो साता गएको पहिरो अहिलेसम्म व्यवस्थापन गर्ने काम हुन सकेको छैन।

उधौली चाड नजिकिएसँगै सरोकारवाला समुदायका प्रतिनिधिहरू संस्थागत रूपमा श्रमदानमा जुट्न आह्वान गरेका छन्। वन कार्यालयले धमाधम ढलापडा रुखहरूको विवरण तथा व्यवस्थापन प्रक्रिया अघि बढाएको छ। ललितपुर महानगरपालिका २३ वडा कार्यालयले व्यवस्थापनको पहल सुरु गरेको छ।

यो धार्मिक वन क्षेत्र २ दशमल ३४ हेक्टर क्षेत्रफलमा फैलिएको छ। किरात समुदायको मागअनुसार नेपाल सरकारले २०५८ सालमा 'किरात धार्मिक वन' घोषणा गरेको छ। यस क्षेत्रफललाई चौघेरा पर्खालले घेरिएको छ। धेरे प्रजातिका रुखबिरुवाहरू रहेका छन्। यस थुम्कोमाथि किरात जातिका माङहिम (देवघर) रहेको छ।

किरात माङहिम व्यवस्थापन समितिले यस क्षेत्रको व्यवस्थापन गर्दै आएको छ। थुम्कोमाथि माङपुजारी बस्ने घर तथा कार्यालय भवन, आफन्तजनका सम्झनामा बनाइएका श्रद्धालु बस्ने फलैचा, चौताराहरू (प्रतिक्षालयहरू) रहेका छन्। थुम्कोमुनि राई जातिको साकेला थान, लिब्जु थान, लिम्बु जातिको तङसिङ सेलाउने थान, सुनुवार जातिको श्याँदर थान, याक्खा जातिको चासुवा थान रहेका छन्।

थुम्कोमुनि पश्चिम-उत्तरतर्फ मच्छिन्द्रनाथ सवडिभिजन वन कार्यालय रहेको छ। यही कार्यालय र वन क्षेत्र हुँदै सातदोबाटो-गोदावरी सडक मार्ग फैलिएको छ। धार्मिक वन दक्षिणतर्फ निजी घरहरू, अपार्टमेन्टहरू रहेका छन्। सडकको उत्तरतर्फ लिटिल एन्जेल्स स्कुल तथा कलेज रहेको छ।

गत असोज १० गतेदेखि १२ गतेभित्र देशभरि परेको अविरल वर्षाद् गएको बाढी, पहिरोबाट सानो हात्तीवन क्षेत्र विच्छेद तुल्याएको छ। थुम्कोमाथि रहेका माङहिम वरिपरिका कम्पाण्ड वालका रूपमा बनेका दक्षिणतर्फका प्रतिक्षालयहरू पहिरोले बगाएको छ। उत्तरतर्फ पहिरोले रुखहरू ढालेर सडक अवरुद्ध भएको थियो। पहिरोले अवरुद्ध आधाजसो रुख र ढुङ्गामाटो पन्छाएर सडक सुचारु राखिएको छ भने वनक्षेत्रको रुख, पहिरो व्यवस्थापन गरिएको छैन। यसैगरी बिजुली, टेलिफोन, इन्टनेटका तारहरू बाटोमै थुप्रिएका छन्।

वन कार्यालयकी अधिकृत दुर्गा कार्कीका अनुसार यस क्षेत्रको करिब २ हेक्टर क्षेत्रफल क्षतिग्रस्त भएका छन्। चौतर्फी पहिरो गएको छ। यहाँका ६१ वटा ठूला र अग्ला रुखहरू ढलेका छन्। 'खासगरी आकस्मिक बजेटको अभावले गर्दा ढलापडा रुखहरू र अन्य व्यवस्थापनमा ढिलाइ भइरहेको छ,' अधिकृत कार्कीले भन्नुभयो, 'वडा कार्यालयसँग समन्वय गरी डिभिजन कार्यालयमार्फत् प्रदेश मन्त्रालयसम्म प्रक्रिया बढायौं। अहिले गोलिया बनाउने र लगत लिने काम भइरहेको छ। त्यसपछि अब टेण्डर प्रक्रियामा जानुपर्छ। कानुनी प्रक्रिया नपुऱ्याइ ठूला रुखहरू हटाउन र उठाउन मिल्दैन। त्यसैले केही ढिलाइ भएको हो।'

वनका कर्मचारीहरू ढलेका रुखहरूको अभिलेखहरू लिइरहेका छन्। मिस्त्रीहरूले रुखको कटान सुरु गरेका छन्।

किरात माङहिम व्यवस्थापन समितिका अध्यक्ष भिम तावा लिम्बुले वन कार्यालयले कानुनी प्रक्रिया पुऱ्याउन भनेकाले धार्मिक क्षेत्र व्यवस्थापनमा ढिलाइ भएको बताउनु भयो। 'धार्मिक क्षेत्रको संरचनाहरू भत्किएका छन् र त्यसलाई पुनःनिर्माण तथा व्यवस्थापन गर्न रुखहरू काट्न, हटाउनु पर्ने हुन्छ,' उहाँले भन्नुभयो, 'तर वन कार्यालयले कानुनी प्रक्रिया पूरा गर्नुपर्छ भन्यो। वडा कार्यालयसँग पनि समन्वय गरेर अघि बढ्ने कोशिसमा छौं।'

यसैगरी आठवटा किराती जातिको किरात समन्वय समिति रहेको छ। समन्वय समितिको तर्फबाट पहिरोबाट क्षतिग्रस्त धार्मिक क्षेत्र पुनःस्थापनाका निम्ति किरात याक्थुङ चुम्लुङका उपाध्यक्ष गोविन्द आङबुङ लिम्बुलाई जिम्मेवारी दिएको छ। 'बजेटको अभावले तत्काल श्रमदानबाट धार्मिक क्षेत्रको सरसफाइ गर्ने निधो भएको छ,' सामाजिक संस्थामार्फत् श्रमदानको सूचना जारी गरिएको उल्लेख गर्दै उपाध्यक्ष आङबुङले भन्नुभयो, 'महानगरसँग बजेटको माग गरेका छौं तर ढिलो हुने भएकाले अहिलेका निम्ति श्रमदानमात्र उपाय रहेको छ।'

उहाँका अनुसार वन कार्यालयले धार्मिक क्षेत्रका अग्ला रुखहरू सबै काट्ने प्रस्ताव गरेको छ। 'तर हामीले अग्लालाई आधा-आधामात्र काट्ने, साना रुखबिरुवाहरूको संरक्षण गर्ने भनेका छौं,' आङबुङले भन्नुभयो। यही मंसिर ३० गते पर्ने उधौली पूजाका निम्ति भने विगतजस्तो धेरै श्रद्धालु र सर्वसाधारणको भिड लाग्न नमिल्ने स्थिति रहेको उहाँको कथन छ।

सानो हात्तीवनको धार्मिक पृष्ठभूमि

ललितपुर महानगरपालिका वडा नं.२३ कोड्खुखोला नजिकै जंगलले घरिएको सानो थुम्कोलाई सानो हात्तीवन भनिन्छ। सातदोबाटोबाट करिब एक किलोमिटर पूर्वतर्फ रहेको छ। इतिहाविद् मञ्जुल याक्थुम्बाले 'किरात तीर्थस्थल सानो हात्तीवन' कृतिमा उल्लेख गर्नुभएअनुसार विसं.१९०५ देखि यहाँ भैरबनाथ पल्टनका किरातीले य?वा अर्थात् उभौलीलगायत अन्य पुजाआजाको सुरुवात गरेका थिए। त्यसयता निरन्तर रूपमा उधौली, उधौली र अन्य अवसरमा समेत पूजाआजा हुने गरेको छ।

किराती जातिले वैशाख पूर्णिमा उभौली र मंसिरे पूर्णिमालाई उधौली मनाउने गर्दछन्। चाडलाई आ-आफ्नो भाषामा साकेला, चासोक, फोलस्यादर, चासोक तङ्नाम भन्द छन्। वर्षाद् लागस"गै लगाइने नया" अन्नबाली सप्रियोस्। प्रकृति र पर्यावरण अनुकुल बनोस भनेर प्रकृतिको पूजा गर्दछन्। त्यसैगरी घर-घरमा कुलपित्रीको पूजासमेत गर्दछन्। त्यसैगरी गरी नया" अन्नबाली पाकेपछि मंसिर पूर्णिमामा उधौली चाड मनाउ"दछन्।

सरकारले २०५८ सालदेखि मंसिरेपूर्णिमा तिथिलाई 'किरात चाड' भनेर घोषणा गरेस"गै सम्बन्धित समुदायलाई विदा दिने चलन बसाएको थियो। अघिल्लो गणतान्त्रिक सरकारले विभिन्न चाड कटौती गरेका थियो भने यो पटक पुनः सार्वजनिक विदा घोषणा भएको छ।

यो संस्कृतिको विशेषता भनेकै सामुहिक स्थलमा भेला भएर नाच प्रदर्शन गर्नु हो। लिम्बूले च्याब्रुङ बजाएर केलाङ नाच्छन्। राईले साकेला नाच्छन्। सुनुवारले श्या"दर सिल नाच्छन्। याक्खाले केलाक्मा नाच्छन्। ढोल, झ्याम्टा, च्याब्रुङ बजाउँदै हात, गोडा, शरीरको हाउभाउ अभिनय गरेर नाचिने नाच अर्थपूर्ण रहेको संस्कृतिविद् तीर्थराज मुकारुङ राई बताउ"नु हुन्छ। 'हाम्रा पितापुर्खाले सुरु गरेको प्रकृति र पुर्खालाई मुन्दुम विधिअनुसार मानमनितो गर्ने महत्वपूर्ण र अर्थपूर्ण चाड हो,' उहाँ भन्नुहुन्छ। खोरिया फा"ड्ने, कोदालोले भस्मे खन्ने, अन्नको बिउ छर्ने, माटोले छोप्ने त्यसपछि बिउ उम्रिन्छ। अब गोडमेल गर्ने र पाकेपछि त्यसलाई पितृलाई चढाएर आशिर्वाद माग्ने जस्ता कृषि युगको अभिनय गर्ने गरिन्छ। इन्डिजियसबाट

# नुनको प्रयोगलाई लिएर विश्वभर चिन्ता !

प्राचीन रोममा व्यापारका लागि नुन असाध्यै महत्वपूर्ण थियो, उदाहरणका लागि, सेनाहरूलाई तलबस्वरूप नुन दिइन्थ्यो। नुनको महत्व आंशिक रूपमा खानालाई जोगाइराख्नका लागि पनि थियो। खानामा किटाणु नलागोस् भनेर पनि नुनमा राखिन्थ्यो।

खानालाई अमिल्याउन ब्याक्टेरियाहरूको विकास अनुगमन गर्न पनि नुनको प्रयोग गरिन्थ्यो। चाहे त्यो बन्दा अमिल्याउन होस् वा अलिभ वा पाउर ोटी वा चीज वा किम्ची बनाउन नै किन नहोस् नुनको प्रयोग हुन्थ्यो। नुन (खासगरी अति प्रशोधित खानेकुराको स्वाद बढाउन वा खानेकुरा जोगाउन प्रयोग हुने सोडियम क्लोराइड)को अत्यधिक प्रयोगले मानिसहरूलाई रोगी बनाइरहेका प्रमाणहरू बढिरहेको देखिन्छ।

अत्यधिक नुनले रक्तचाप बढाउँछ भने यसले हृदयाघात वा मस्तिष्कघात हुन सघाउँछ। नुनका कारण पेट र मलाशयको क्यान्सरको खतरा पनि बढ्न सक्छ। यसले हड्डी र मोटोपना अनि श्रवण शक्तिमा पनि असर गर्न सक्छ। कुनै बेला सुन जस्तै महत्वपूर्ण मानिने नुनलाई अहिले कसरी धेरै चिकित्सासम्बन्धी संस्थाहरूले रोगको प्रमुख सूचकका रूपमा लिइरहेका छन् ?

नुनको वकालत गर्नेहरूसँग यो प्रश्नको जबाफ हुनसक्छ।

ग्यास्ट्रोइन्टेरोलोजिस्ट र वाशिङटन विश्वविद्यालयका अनुसन्धान गर्ने वैज्ञानिकका रूपमा तपाईंको पेटमा हुने माइक्रोबहरूले पनि नुनले रोग निम्त्याउन कसरी मद्दत गर्छ भन्ने बुझाउन म बढ्दो प्रमाणहरू तपाईंहरूसँग बाँड्न चाहन्छु।

रक्तचापमा भूमिका

रक्तचाप र मुटुको रोगमा नुनको भूमिका यसले रक्त धमनीभित्र पानीको मात्रा कति नियमित गर्छ भन्नेमा भर पर्छ। सामान्य रूपमा बुझ्दा रगतमा जति बढी सोडियम भयो त्यति नै बढी पानी यसले रक्त धमनीमा तान्छ। यसले रक्तचाप बढाउँछ र त्यसपछि हृदयाघात र मस्तिष्कघातको खतरा पनि बढाउँछ।

रक्तचापमा नुनको असरबारे केही मानिसहरू कम वा बढी संवेदनशील हुन सक्छन्। हालैको अनुसन्धानले पेटमा हुने माइक्रोबायोमका कारण पनि नुनले रक्तचाप बढाउन सक्छ। नुनले स्वस्थ माइक्रोब भनिने सूक्ष्म जीवाणुलाई र फाइबरबाट बन्ने मेटाबोलाइट (जीव तत्त्वमा परिवर्तन हुँदा बदलिने वस्तु) घटाइदिन्छ। यी मेटाबोलाइट्सले रक्त धमनीमा जलन घटाइदिन्छ र त्यसले रक्तचाप कम गर्न मद्दत गर्छ। केही अपवाद बाहेक नुनको धेरै मात्राले हाम्रो खाना पचाउन मद्दत गर्ने माइक्रोबलाई विषालु बनाइदिन्छ।

त्यही कारण मानिसहरूले नचाहिने ब्याक्टेरियाहरू नआओस् र खाना लामो समय नबिग्रियोस् भनेर नुनको प्रयोग गर्दै आएका हुन्। तर आधुनिक खानेकुरामा धेरै नै सोडियम हुन्छ। विश्व स्वास्थ्य सङ्गठनका अनुसार औसत मानिसलाई प्रति दिन २,००० मिलिग्रामभन्दा कम नुन खानु स्वास्थकर हुन्छ। विश्वव्यापी औसत हेर्ने हो भने स्वास्थ्यकर तहभन्दा हाम्रो पेटमा बढी अर्थात् ४,३१० मिलिग्राम नुन खपत हुन्छ।

मोटोपनामा नुनको भूमिका

हामीले खाने प्रत्येक खानामा दैनिक बढ्ने प्रत्येक ग्राम सोडियमले मोटोपना हुने खतरा १५ प्रतिशतले वृद्धि गर्ने एउटा अध्ययनले अनुमान गरेको छ। अमेरिकाको नेशनल इन्स्टिच्यूट्स अफ हेल्थले गरेको पोषणसम्बन्धी मापदण्डबारेको अध्ययनले जो व्यक्तिले अति प्रशोधित खानेकुरा खान्छ उसले प्रशोधित खाना नखाने मानिसको दाँजोमा दुई सातामा करिब ५०० क्यालोरी बढी खपत गरेको र एक किलो वजन बढेको पाइयो। दुई वटा खानामा भएको सबैभन्दा ठूलो भिन्नता भनेको अति प्रशोधित खानामा भएको थप १.२ ग्राम सोडियम हो। नुन बढी खाँदा क्यालोरी नभए पनि किन वजन बढ्छ भन्ने एउटा व्याख्या के हो भने सोडियमले खानेकुराको तलतल बढाउँछ।

चिनी र अस्वस्थकर फ्याटसँग सोडियम मिसाएको खानेकुरा खाँदा पनि मोटोपना बढ्छ किनभने यी खानेकुरामा थप खानाको तलतल बढाउने क्षमता हुन्छ र त्यसले हाम्रो दिमागलाई त्यसैगरी निर्देशित गर्छ। नुन खानु तलतल लाग्ने बानीसँग पनि जोडिएको हुनसक्छ। माइक्रोबायोम मेटाबोलाइट्सले वजन घटाउन वीगोभी र ओजेम्पिक अर्थात् पेटमा हुने जीएलपी-१ हर्मोनको विकास गर्न मद्दत गर्छ।

जीएलपी-१ मार्फत् एउटा स्वस्थ माइक्रोबायमले भोक, ब्लड सुगरको मात्रा र इनर्जी फ्याटको रूपमा राख्ने वा नराख्ने भन्ने शरीरको निर्णयलाई नियन्त्रण गर्छ। तर धेरै नुनले भने यस्तो हर्मोनको विकासमा बाधा पुऱ्याउँछ।

समुद्री पानीबाट नुन हटाउने देशहरू

थुप्रै देशहरूले नुनको खपत घटाउने अभियान लागु गरिरहे पनि अझै पनि विश्वका धेरै भागमा सोडियमको खपत बढ्दो छ। नुनको खपत कम गर्ने कुरामा अमेरिका अझै पनि पछाडि नै रहे पनि थुप्रै युरोपेली देशहरूले भने नुनको खपत कम गर्दा हुने फाइदा अभियानमार्फत् मुटु रोगका कारण हुने मृत्यु लगायतमा कम देख्न थालिसकेका छन्। युरोपेली देशहरूमा नुनको खपत कम होस् भनेर नुनको मात्राको लेबल राख्ने, नुन सीमित गर्न कर लगाउनेलगायत अभियान सुरु गरिएको छ।

फास्ट फूड सामग्रीहरूमा पनि देशपिच्छे नुनको मात्रा फरक भएको खुलासा भएको छ। उदाहरणका लागि अमेरिकामा मक्डोनल्डस्को चिकन नगेट्स् अनि कोकाकोलामा अन्य देशमा भन्दा धेरै नुन भएको पाइयो।

अमेरिकामा नुनको बढी खपत हुनमा नुनको उद्योगको भूमिका हुन सक्छ। सन् २०१० मा नुनमाथिको सरकारी नियमन रोक्नका लागि त्यहाँ पैरवी भयो। नुन भएका खानेकुराहरूको बिक्री राम्रो हुन्छ। धेरै वर्षसम्म नुन उद्योगहरूले जनस्वास्थ्यसम्बन्धी सन्देशलाई नै दुबिधामा पारेको हुनसक्छ। नुनको खपत घटाउन किन महत्त्वपूर्ण छ भन्ने कुरामा जोडतोडका साथ बुझाइएन। तर खानामा नुन कम हाल्ने क्रियाकलाप बढ्दै छन् र त्यसबारे संस्थाहरूले पनि प्रतिक्रिया जनाइरहेका छन्।

सन् २०२१ मा अमेरिकाको कृषि मन्त्रालयले नयाँ उद्योग निर्देशिका जारी गरेको छ जसमा व्यावसायिक रूपमा तयार र प्रशोधन गर्ने खानेकुरामा बिस्तारै नुनको मात्रा घटाउँदै जान आह्वान गरिएको छ। साल्ट इन्स्टिट्यूट अफ अमेरिका सन् २०१९ मा विघटन भयो। अमेरिकन फ्रोजन फूड इन्स्टिट्यूट र कार्गिलजस्ता अन्य मुख्य आपूर्तिकर्ताहरूले पनि खानेकुरामा नुनको कम प्रयोग गर्न खोज्दै छन्।

सन्तुलित मात्रा

नुन खपत गरिरहँदा तपाईंको पेटमा हुने माइक्रोबायमलाई कसरी स्वस्थ र चलायमान राखिरहने ?

त्यसका लागि फास्ट फूड र अति प्रशोधित खानेकुराहरू जस्तै चिप्स, क्र्याकर, सोडा, पाउरोटी लगायतको खपत सीमित बनाएर सुरु गर्न सकिन्छ। अहिले, अमेरिकामा ७० प्रतिशतसम्म नुनको खपत प्याकेटमा भएका र प्रशोधित खानाबाट हुन्छ। त्यसको सट्टा नुन र चिनी कम भएका र पोटासियम र फाइबर धेरै भएका जस्तै अप्रशोधित खानेकुराहरूमा खानमा ध्यान दिनुहोस्। अप्रशोधित खानामा गेडागुडी, बदामका परिकार, अन्न, फलफूल र तरकारीहरू पर्छ।

पहिला नुन धेरै हुने भए पनि अमिल्याइएका गुन्द्रुक, किम्ची, मस्यौरालगायतका खानेकुराहरू पनि राम्रो विकल्प हुनसक्छ। यी खानेकुरामा पोटासियम, पोलिफेनोल्स, फाइबर, फ्याटी एसिड हुन्छ।

अन्त्यमा, खानेकुरामा सोडियम र पोटासियमको मात्रा मिलाउन खोज्नुहोस्। सोडियमले रक्त नलीमा मद्दत गर्छ भने पोटासियमले कोशिकाहरूमा जान मद्दत गर्छ।

मात्रा मिलाएर सोडियम र पोटासियम लिन सकियो भने त्यो शरीरका लागि सबैभन्दा उत्तम खपत हुन्छ। नुनबारे सचेत हुनसक्ने भयो भने तपाईंको माइक्रोबायमले तपाईंलाई धन्यवाद दिनेछ। बीबीसीबाट

# वैज्ञानिकहरूले पत्ता लगाए पुरानो इस्लामिक खेती प्रविधि

एजेन्सी। विश्वमा अनुसन्धानको क्षेत्रमा तिव्र गतिमा अगाडि बढिरहेका देशहरूमा इजरायलको नाम पक्कै पनि समावेश छ। यो देश मुस्लिम शत्रु राष्ट्रहरूले घेरिएको छ र यी दुई पक्षबीच युद्धको अवस्था छ। यस्तो अवस्थामा एउटा अनौठो खबर आएको छ। इजरायली वैज्ञानिकहरूले एक उत्कृष्ट प्रविधि प्रयोग गरेका छन् जुन अरब र वरपरका मुस्लिमहरूले सयौं वर्ष पहिले पानी नभएको क्षेत्रमा प्रयोग गर्थे। मरुभूमि क्षेत्रको यो पुरानो वाटर हार्वेस्टिङ खेती प्रविधिले आज विश्वभर पानी संकटका कारण संकटमा परेको कृषिलाई बचाउन काम गर्न सक्छ र धेरै समस्याहरू एकैसाथ समाधान गर्न सक्छ।

शताब्दी पहिले देखि प्रविधि

यी प्रविधिहरू इजरायल जस्तो देश नभएको युगका हुन् र वैज्ञानिकहरूले अपनाएका प्रविधिहरू आजको इजरायलमा पनि त्यस युगमा प्रयोग हुने गरेको छ। यी प्रविधिहरू ९ औं शताब्दीदेखि १२ औं शताब्दीसम्म इस्लामिक मानिसहरूले अपनाएका थिए र उनीहरूले पानी बचाउने र आफ्नो लागि खाना उत्पादन गर्ने व्यवस्था गरे।

कसले गर्यो अनुसन्धान ?

यो अध्ययन रहमत गानको बार-इलान विश्वविद्यालय र जेरुसेलमको इजरायल पुरातात्विक प्राधिकरणले गरेको अनुसन्धानमा इरान, गाजा, इजिप्ट, अल्जेरिया र इबेरियाको एट्लान्टिक तटका विज्ञहरूले पानीको संरक्षण र माटो खेती गर्ने इजरायलको प्रयासहरूको जाँच गरे। भूमध्यसागरीय तटहरूमा यस सन्दर्भमा, प्रविधिहरू सुधार गर्न काम गरिएको छ।

आजको समस्या समाधान गर्न सकिनेछ

आजका सुख्खा तथा सीमान्तकृत क्षेत्रमा पानीको अभाव र खाद्यान्न असुरक्षाको बढ्दो चुनौतीलाई सम्बोधन गर्न यस्ता लाभदायक प्रविधिहरू अपनाउन सकिने अनुसन्धानकर्ताहरूले सुझाव दिएका छन्। तिनीहरू पनि यी प्रविधिहरूसँग प्रभावकारी रूपमा व्यवहार गर्न सकिन्छ।

यसमा के हुन्छ

यी विधिहरूमा, शहरी आवासीय क्षेत्रहरू नजिकै उपलब्ध पानी प्रयोग गरिन्छ। यस बाहेक स्थानीय प्राङ्गारिक पदार्थ र सहरी फोहोरको प्रयोग गरेर बलौटे माटोको तहलाई उर्वर माटोले भरिन्छ। यस उर्वर माटोबाट तरकारी, तरबूज, खजुर र अंगूर बाली उत्पादन गरिन्छ।

भूमिगत पानी : विशेष कुरा यो छ कि यी प्रविधिहरूबाट लामो समयसम्म पानीको उपलब्धता सुनिश्चित गरिन्छ र यसका लागि जमिनभित्रको कम गहिराइमा जम्मा भएको पानी मात्र प्रयोग गरिन्छ, जसमा वर्षाको पानी र भूमिगत पानीको पनि सहयोग लिइन्छ। यसमा विश्वका अन्य क्षेत्रजस्तै जमिनमा पानी छर्किने वा खन्याइँदैन, तर बालीको जरालाई खेर नजाने गरी पर्याप्त पानी प्राप्त हुन्छ।

मुस्लिम अनुसन्धानकर्ताहरूलाई धन्यवाद

यस अनुसन्धानको विशेष कुरा यो हो कि लेखकहरूले पर्यावरण पुरातत्वमा प्रकाशित आफ्नो ३५ पृष्ठको शोध पत्रमा लेखेका छन् कि उनीहरू धेरै मध्यपूर्व मुस्लिम अनुसन्धानकर्ताहरूप्रति आभारी छन्, जसले उनीहरूको परम्परागत खेती र सिँचाइको बारेमा धेरै मूल्यवान जानकारी आत्मविश्वासका साथ बाँडे। उनीहरू आशा गर्छन् कि यी प्रविधिले सुख्खा मरुभूमिमा पानीको अभाव र खाद्य असुरक्षाको समस्या समाधान गर्न सक्छ।

# भक्तपुरमा शुरु नै नभई सकियो कांग्रेसको सय दिने अभियान

भक्तपुर। नेपाली कांग्रेसको सय दिने विशेष अभियान भक्तपुरका कतिपय स्थानीय तहको वडा र पालिकामा शुरु नै नभई मंगलवार समापन गरिएको छ। गत असोज ७ गते शुरु भएको सय दिने अभियान ४९ औ राष्ट्रिय एकता तथा मेलमिलाप दिवसको अवसर पारेर पार्टी कार्यालय सल्लाघारीमा आयोजित कार्यक्रममा समापन गरिएको हो।

पार्टीको सबै तहका सांगठनिक गतिविधिलाई प्रभावकारी बनाउन, सदस्यता वितरण र नवीकरण कार्यलाई तिव्रता दिने गरी कांग्रेसले सय दिने अभियान शुरु गरेको थियो। अभियान मार्फत जिल्ला पुगेका केन्द्रीय नेताले विधान बमोजिम नियमित बैठक/सम्मेलन राख्ने, जिल्ला मातहतका निकायमा प्रतिनिधि खटाउने, पार्टीका वडा, पालिका, प्रदेश सभा र प्रतिनिधि सभा क्षेत्रीय समितिहरुको बैठक राख्न लगाउने जस्ता कार्य योजना थियो।

अभियान अन्तर्गत भक्तपुरमा केन्द्रीय सदस्य बलबहादुर केसी प्रतिनिधिको रुपमा खटिनु भएको थियो। बडादशैं, तिहार जस्ता ठूला चाडपर्वका कारण प्रभावित बनेको अभियानका कार्यक्रम केन्द्रीय प्रतिनिधि केसीको अस्वस्थताका कारण पनि भक्तपुरमा अभियान प्रभावित भएको थियो।

भक्तपुरमा कांग्रेसको सय दिने अभियानका कार्यक्रम मध्यपुर थिमि, चाँगुनारायण र भक्तपुर नगरभित्र शुरु नभएको वडा सभापतिहरुले बताएका छन। अभियान अन्तर्गत जिल्ला समितिको बैठक बस्ने, जिल्लामा विभिन्न भातृ तथा शुभेच्छुक संघ संस्थाको संयुक्त बैठक बस्ने, सूर्यविनायकमा पालिका र वडा स्तरमा अभियान सञ्चालन, चाँगुनारायणमा नगरसमिति, क्षेत्रीय समितिको संयुक्त बैठक बस्ने कार्यहरु भएका छन।

तर भक्तपुर र मध्यपुर थिमिमा नगर समितिको बैठक समेत बस्न नसकेको कांग्रेस नेताहरुले बताएका छन। यस्तै चाँगुनारायणका वडा समितिमा पनि कार्यक्रम नभएको बताईएको छ।

सूर्यविनायकमा भने सय दिने अभियानका क्रममा 'टोल टोलमा कांग्रेस' अभियान सञ्चालन गरी संगठन बिस्तारको कार्य गरेका छन। सो अभियानमा प्रतिनिधि सभा सदस्य एवम् नेपाली कांग्रेस भक्तपुरका सभापति दुर्लभ थापा, स्थानीय जनप्रतिनिधि र स्थानीय कार्यकर्ताबीच अन्तरक्रिया, छलफल गर्नुका साथै पार्टी भित्र रहेका विविध समस्याका बारेमा समेत छलफल भएको नेपाली कांग्रेस सूर्यविनायक नगर समितिका प्रवक्ता रमेश खड्काले बताउनुभयो।

अभियानको समापन कार्यक्रममा नेपाली कांग्रेसका केन्द्रिय सदस्य मदन कृष्ण श्रेष्ठले कांग्रेसले जननायक विपि कोइरालाले देशको सार्वभौम सत्ताको रक्षाको लागि आफ्नो जीवनलाई दाउमा राखेर मेलमिलाप नीति लिएर निर्वासनबाट स्वदेश फर्किएको बताउनुभयो।

जिल्ला सभापति एवं संघीय सांसद थापाले पार्टीको क्रियाशिल नविकरण सन्तोषजनक नभएको गुनासो गर्दै पार्टीका केन्द्रीय सदस्य, पुर्वसभापतिहरुले नै क्रियाशिल सदस्यता नविकरण नगरेको बताउनुभयो।उहाँले जनप्रतिनिधिको रुपमा रहेका वडाअध्यक्षहरुले फोन नउठाउने गरेको गुनासो बढी आउने गरेको चर्चा गर्दै जनप्रतिनिधिहरुलाई जनताको काममा ध्यान दिन निर्देशन दिनुभयो। उहाँले पार्टीको सय दिने अभियानका क्रममा सहभागी नहुने नेताहरूलाई निर्वाचनमा भोट नदिन समेत कार्यकर्तालाई आग्रह गर्नुभयो।

# दुधमा रगत मिसाएर पिउने अनौठो जनजाति

एजेन्सी। विश्वका विभिन्न देशमा संस्कृतिका फरक-फरक खाना परम्पराहरू रहेका छन्। कतिपय ठाउँमा दुधबाट बनेका चिज धेरै खाइन्छ भने कतिपय ठाउँमा मासुलाई आहारको महत्वपूर्ण हिस्सा मानिन्छ। शाकाहार र मांसाहारको बहस जारी छ। सामान्यतया खाना खाने बानी भौगोलिक अवस्थामा निर्भर गर्दछ। आज हामी तपाईलाई अफ्रिकाको एक जनजातिको बारेमा बताउन गइरहेका छौं जसले जनावरको रगत दुधमा मिसाएर पिउने र पाहुनाको स्वागत पनि गर्ने गर्छ।

रगत मिसाएर दूध पिउने अनौठो बानी भएको जनजातिको नाम मसाई हो। यो अर्ध घुमन्ते जनजाति मुख्यतया दक्षिणी केन्या, उत्तरी तान्जानिया र इथियोपियामा बस्छ। यो निलोटिक जातीय समुह हो।

जनावर वरपर जीवन

मसाई जनजातिको जीवन धेरै हदसम्म जनावरहरूमा निर्भर छ। सयौं गाई पाल्छन्। मसाई जनजातिको परम्परागत आहारमा मासु, रगत, दूध, बोसो, मह र रूखको बोक्रा गरी छवटा आधारभूत चीजहरू समावेश छन्। तिनीहरू ताजा दूध पनि पिउने गर्छन् र कहिलेकाहीँ गाईवस्तुको ताजा रगत पनि मिसाउँछन्। दूधमा रगत मिसाएर सामान्यतया धार्मिक परम्पराहरूमा पिउने गरिन्छ। मसाई मानिसहरू बिरामी पर्दा पनि पिउने गर्छन्। यी मानिसहरूले रगत निकाल्न गाईवस्तुको नसा काट्ने वा पञ्चर गर्ने गर्छन्।

मसाई संसारको सबैभन्दा अग्लो मान्छे हो

अफ्रिकाको मसाई जनजाति संसारको सबैभन्दा अग्लो मानिस मध्ये एक हो। मसाई जनजातिको औसत उचाइ १९०.५ सेमी / ६.२५ फिट छ। तुत्सी जनजातिका मानिसहरू मात्र उचाइमा उनीहरूसँग मेल खान सक्छन्।

मसाईहरूले कसको पूजा गर्छन ?

मसाई जनजातिका मानिसहरू एकेश्वरवादी हुन्। एङ्गाई नामक देवताको पूजा गर्ने गर्दछन्। मसाई जनजातिको एङ्गाई देवताका दुई रूप छन् - एङ्गाई नारोक र एङ्गाई ना न्योकी। एन्गाइ नारोकले रमाईलो घाँस र समृद्धि ल्याउँछ र एङ्गाइ ना न्योकीले अनिकाल र भोक ल्याउँछ। तर, अहिले ठूलो संख्यामा मसाई समुदायले पनि इसाई धर्म अपनाएका छन्।

# स्थानान्तरण गर्न खोजिंदैछ जगाती वस बिसौनी ?




भक्तपुर। भक्तपुरको जगातीबासीले आर्थिक चलखेलका कारण २०२१ सालदेखि चल्दै आएको जगाती बस बिसौनी अन्यत्र सारिएको आरोप लगाएका छन्। अरनिको राजमार्ग सुधार तथा विस्तार गर्ने क्रममा बनेको पछिल्लो डिजाइनमा बस बिसौनी स्थानान्तरण गरिएको भन्दै स्थानीय ९४ घरधनीहरुले हस्ताक्षर गरी साविकमै वस बिसौनी कायम गर्न संयुक्त माग गरेका छन्।

अरनिको राजमार्ग अन्तर्गत भक्तपुरको सूर्यविनायकदेखि धुलिखेलसम्मको सडक विस्तार योजना हाल चालू छ। पहिलाको डिपिआरमा कायम रहे पनि पछिल्लो डिजाइनमा वस बिसौनी अन्यत्र स्थानान्तरण गरेको भन्दै स्थानीय आन्दोलित छन्।

आन्दोलनको क्रममा स्थानीयले भक्तपुर नगरापलिका वडा नं ८ लिवाली र सूर्यविनायक नगरपालिका वडा नं ८ सिपाडोल कार्यालयमा पुगेर दुवै वडा अध्यक्षहरुको ध्यानाकर्षण गराएका छन्। आर्थिक चलखेलका कारण वस बिसौनी स्थानान्तरण गरिएको भन्दै स्थानीयले दुवै वडा अध्यक्षहरुलाई सहयोगका लागि आग्रह गरेका छन्। जगाती वस बिसौनी भक्तपुर नगरपालिका वडा नं ८ र सूर्यविनायक नगरपालिका वडा नं ८ को सिमामा पर्दछ। यही कारण स्थानीयले दुवै वडा अध्यक्षहरुसँग सहयोगमा माग गर्न पुगेका हुन्।

आन्दोलनको क्रममा स्थानीयको माग बमोजिम दुवै वडा कार्यालयहरुले यथास्थानमा वस बिसौती राख्ने व्यवस्था मिलाउन सूर्यविनायक धुलिखेल सडक आयोजनालाई पत्र काटेका छन्। उहिलेदेखि चल्दै आएको वस स्टपलाई स्थानीय निकायहरुसँग कुनै छलफल नै नगरी स्थानान्तरण गरिएको भन्दै दुवै वडा कार्यालयहरुले आयोजनाको कार्यालयलाई पत्र काटेका छन्। साथै कार्यायलहरुले जिल्ला प्रशाशन कार्यालय भक्तपुर, जगाती प्रहरी बृत भक्तपुरलाई पनि बोधार्थ पठाएका छन्। यसअघि स्थानीयले सडक विभाग सूर्यविनायक धुलिखेल सडक विस्तार आयोजनाको कार्यालय मध्यपुर थिमि भक्तपुरका प्रमुखसमक्ष पनि बस बिसौनी यथास्थानमा राख्न ज्ञापनपत्र बुझाएका थिए।

अरनिको राजमार्ग अन्तर्गत भक्तपुरको सूर्यविनायकदेखि धुलिखेलसम्मको सडक विस्तारको क्रममा हाल वस बिसौनी सार्न खोजिएको हो। यसअघि भएको डिपिआरमा बस बिसौनी जस्ताको तस्तै उही ठाउँमा राखिए पनि पछिल्लो पटकको डिजाइनमा वस बिसौनी अन्यत्र सार्न खोजिएको स्थानीयले बताएका छन्।

बस बिसौनी सार्न खोजिएको भन्दै विरोधका लागि स्थानीयले संघर्ष समिति पनि बनाएका छन्। स्थानीय सीताराम खाइतूको सयोजकत्वमा स्थानीयले संघर्ष समिति गठन गरी संघर्ष गर्दै आएका हुन्।

सघर्ष समितिका संयोजक सीताराम खाइजूले बस बिसौनीलाई जस्ताको तस्तै राख्न मागसहित आफूहरुले सरोकारवाला निकायमा ज्ञापनपत्र बुझाएका जनाए। ज्ञापनपत्र बुझाएपछि पनि त्यसको सुनुवाई नभएपछि ध्यानाकर्षण पनि गराएको उनले सुनाए।

भक्तपुर नगरपालिका वडा नं ८ लिवालीका वडा अध्यक्ष कृष्णप्रसाद कोजूले आफूहरुसँग कुनै छलफल नै नगरी एकतर्फी रुपमा वस बिसौनी सारिएको भन्दै आपति जनाए। उनले बस बिसौनी यथास्थानमै कायम गरी स्थानीयका माग सम्वोधन गर्न आयोजनालाई पत्र काटेको जानकारी पनि गराए।

अरनिको राजमार्ग बनेदेखि चल्दै आएको पुरानो बस बिसौनीलाई हटायो भने भक्तपुरका विभिन्न ठाउँहरुमा जाने मानिसहरुलाई समस्या पर्ने स्थानीयको भनाई छ। बस बिसौनी अन्यत्र सारे भक्तपुर नगर आउने, ख्वप कलेज, ख्वप अस्पताल, बागीश्वरी मावि,कलेज, डोलेश्वर, मलामीका लागि हनुमानघाट जाने मानिसहरु प्रभावित भई जनजीवन नै समस्यामा पर्ने उनीहरुको भनाई छ।

स्थानीयका अनुसार राजमार्ग बनेको बेला २९२१ सालदेखि नै जगातीको वस बिसौनी जगातीमै रहेको थियो। अरनिको राजमार्ग तत्कालिन राजा महेन्द्रको पालामा नेपाली कलाकार अरनिकोको नाममा चीन सरकारले बनाइदिएको चीनसँग जोड्ने राजमार्ग हो।

सडक विभाग सूर्यविनायक धुलिखेल सडक आयोजना कार्यालय मध्यपुर थिमि भक्तपुरका आयोजना प्रमुख ईन्जिनियर राजेन्द्रप्रसाद दासले स्थानीयको विरोधपछि बस बिसौनी कहाँ राख्ने भन्नेबारेमा थप छलफल चलिरहेको जानकारी गराए। स्थानीय जनताको उचित मागलाई माथिलो निकायसमक्ष राखेर स्थानीय तहसँगको परामर्शमा जायज माग पूरा गराउन आफूले भूमिका खेल्ने उनले बताए।

अरनिको राजमार्ग चीनसँग जोड्ने मुख्य राजमार्ग हो। पछिल्लो वर्ष बनेपा सिन्धुली बर्दिबास सडक निर्माण सम्पन्न भएपछि काठमाडौंलाई तराईसँग जोड्ने यो छोटो राजमार्ग पनि हो।

बस बिसौनीलाई हालको भन्दा केही सय मिटर पश्चिम सूर्यविनायक अस्पताल नजिकै सार्ने डिजाइन तयार गरिएको बताइएको छ।

## सत्ता....

बनाइएको छ । प्रधानमन्त्री कार्यालयले पनि सहजीकरण गरेर यो कार्यदलले काम गर्ने सदस्य प्रताप पौडेलले जानकारी दिए । 'दुई प्रमुख दलको सरकार बनेको छ । यस्तोमा यसले नागरिकले अनुभूत गर्ने गरी काम गरोस् भन्ने अपेक्षा स्वाभाविक छ । प्रमुख दुई दल एक ठाउँमा हुँदा कतिपय कानूनी र प्रक्रियागत कुरा टुंग्याउन सजिलो हुन्छ । साथै, जनताले बोध गर्ने र अनुभूत गर्नेगरी पनि काम गर्न सक्ने अनुकूलता कार्यदललाई छ,' पौडेलभनाई छ । के कुरालाई पहिलो प्राथमिकता दिएर सार्वजनिक सेवा प्रवाह र आर्थिक सुधारमा काम गर्न सकिन्छ भनेर छलफल गरेका छौं । यसका लागि तत्काल गर्न सकिने कानूनी, संरचनागत सुधारसहितका काममा हामी केन्द्रित भएका छौं ।' उनले भने ।

कार्यदलले विद्यमान कानूनमा सुधार गरी प्रक्रियागत सहजताजस्ता विषयमा सरकारलाई मसिनो गरी सुझाव दिने पौडेलले बताए । 'सरकार गठन भएको ६ महिना भइसकेको छ । सेवा प्रवाह र लगानी सहजीकरण, आर्थिक सुधारमा कसरी काम गर्न सकिन्छ भनेर यसले सुझाव दिनेछ । त्यस्तै, संघीयता कार्यान्वयनका लागि बनाउनुपर्ने, खारेज गर्नुपर्ने र एकरूपता ल्याउनुपर्ने कानून, प्रक्रियागत सहजताको आवश्यकता अनुसार काम गर्छौं,' पौडेलले भने, 'यतिमात्रै होइन, सबै मन्त्रालयसँग जोडिएका विषयमा समेत छलफल गरेर सुझाव दिन्छौं । यिनीहरूका लागि विद्यमान कानूनमा सुधार गर्ने प्रयास स्वरूप नियमावली, कार्यविधि र प्रक्रियागत झञ्झट हटाउनबारे अध्ययन गरेर सुझाव दिनेछौं ।'

नेकपा एमाले र कांग्रेसको सरकार निर्माण ताका प्रमुख रुपमा सहमति बनेको संविधान संशोधन हो । यस विषयमा सरकार गठनको समय जति चर्चा पाएको थियो । त्यो अवब क्रमशः ओझेलमा पर्दै गएको र जनमानसमा पुन सरकारको काम कारवाहीका सम्बन्धमा आलोचना शुरु हुन थाले पछि पुनः संविधान संशोधनका लागि पहिले सत्तारुढ दलबीच समान धारणा तय गर्न सांसद, पूर्व सांसदसहितको कार्यदल बनाउने तयारी भएको हो ।

यसअघि कांग्रेस र एमालेले सात बुँदे सहमतिमै स्वीकारको संशोधनको विषयमा पनि दलहरूले कार्यदल बनाएका छन् । संविधान बनेको १० वर्षमा यसको पुनरवलोकन गर्ने व्याख्याअनुरूप केही विषयमा संशोधन गर्ने तयारीमा कांग्रेस र एमाले छन् । सरकार बनाउँदा नै स्वीकारेको विषय भएकाले दुवै दलले यो विषयलाई प्राथमिकतामा राखेका छन् । प्रधानमन्त्री केपी शर्मा ओलीका प्रेस संयोजक रामशरण बजगाईंले संविधानको झण्डै १० वर्षे अभ्यासको अनुभवलाई हेरेर आवश्यक संशोधन गर्न खोजेको बताए ।

'अहिलेसम्मको अभ्यासअनुसार संविधानमा के-के कुरामा सुधार हुनुपर्छ भनेर पहिले दुई दलबीच समान धारणा बनाउन आवश्यक छ । तर, यसमा कांग्रेस-एमाले मात्रै होइन, अरूसँग पनि समान मत बनाएरै जाने विषय हो,' बजगाईंले भने, 'तत्काल यसअघि बनेकै राजनीतिक संयन्त्रले काम गरिरहेको छ । यसको आकार फराकिलो हुँदै जाँदा कार्यदलमा विज्ञ र सदस्यहरू आवश्यकताअनुसार थपिँदै जान्छन् ।'

'संविधान संशोधन कांग्रेस र एमाले मात्रै मिलेर हुँदैन । यसमा लामो छलफल र संविधानको समीक्षापछि निष्कर्षमा पुग्ने हो । यसका लागि धेरै समय लाग्छ,' बजगाईंले भने, 'संशोधन गर्ने भनेर छलफल चलाउने, विज्ञबाट सुझाव लिने, आवश्यकताको पक्ष पहिचान गरेपछि बल्ल संशोधनका विषयमा पुग्ने हो ।' संशोधनमा निर्वाचन प्रणालीअन्तर्गत प्रदेशमा प्रत्यक्ष निर्वाचन गर्ने, राष्ट्रिय दल बन्नका लागि थ्रेसहोल्ड ३ बाट बढाउनुपर्ने, समानुपातिक घटाउनेजस्ता विषय सत्तारुढ दलबीच चर्चामा छन् । तर, सत्तारुढ दलबीच सैद्धान्तिक हिसाबले कुरा मिलेपछि मात्रै विपक्षी र अन्य दलसँग संवाद गर्ने उनीहरूको तयारी छ ।

'संविधानको रिभ्यु गर्नुपर्छ भनेर यो विषय उठेको हो । कार्यदल बनाएर प्रक्रिया अगाडि बढाउने, कांग्रेस र एमालेबीच सहमति गर्ने, अन्य दलको सहमति लिने र जनताको राय लिन जाने हो,' घिमिरेले भने, 'त्यसपछि निर्वाचन प्रणाली, संघीय प्रणालीको विषयमा प्रवेश गर्नुपर्छ । संशोधन गर्ने भनिसकेपछि यी विषयमा प्रवेश नगर्ने हो भने संशोधनको औचित्य पुष्टि हुन्न ।' प्रमुख प्रतिपक्षी माओवादीले प्रत्यक्ष निर्वाचित कार्यकारीका लागि लबिङ गर्दै आएको छ । नेपाली कांग्रेसका प्रमुख सचेतक श्याम घिमिरेले कार्यदल बनाएर अगाडि बढ्ने प्रक्रियामा रहेको बताए ।

कांग्रेस महामन्त्री गगन थापा संविधान संशोधनका लागि दुई दलबीच छलफल भइसकेको दाबी गरेका छन् । तर, हतार गर्ने भन्दा पनि दलहरूबीच गहन संवाद गरेर मात्रै यो विषय अगाडि बढ्ने बताउँछन् । साथै यसले लामो समय लिन सक्ने धारणा राख्दछन् ।

अहिल सरकारमा रहेका दुई ठूला दलहरु शक्तिशाली सरकार मात्रै होइन, जुनसुकै कानूनलाई सहजै पास गर्न सक्ने झण्डै दुईतिहाइ मतसमेत कांग्रेस र एमालेसँग छ । तर, विडम्वना अझै पनि संविधान अन्तर्गत राज्य संचालनका लागि अति महत्त्वपूर्ण विधेयकहरू संसदमा अझै अलपत्र छन्, अझ कतिपय विधयेकका विषयमा छलफलसम्म हुन नसकेको सरकारमा सहभागी दलहरुकै सदस्यको स्वीकारोक्ति छ ।

सरकारले सत्ता टिकाउने नाममा संसदको कारवाहीलाई प्राथमिकतामा नराख्दा विद्यालय शिक्षा, संघीय निजामती सेवा, अख्तियार दुरुपयोग अनुसन्धान आयोग ऐन संशोधन, भ्रष्टाचार निवारण ऐनजस्ता महत्त्वपूर्ण विधेयकहरू संसदमा अलपत्र अवस्थामा छन् । यी बाहेक बैंक तथा वित्तीय संस्था, विद्युतीय व्यापारसहितका १९ विधेयक छलफलका क्रममा छन् । यसैले आगामी हिउँदे अधिवेशनबाट यी विधेयकलाई पारित गराउन कार्यदल बनाइएको दाबी सत्तारुढ दलको छ । यो कार्यदलमा एमाले सचिव एवं सांसद योगेश भट्टराई र कांग्रेसका सह-महामन्त्री एवं सांसद जीवन परियार छन् । त्यस्तै हालै मात्र सहकारीका विषय देशमा जटिलता तर्फ बढ्दै गएको र सहकारीकै कारण आम जनसमुदायको अर्बौं रकम जोखिममा रहेको अवस्थामा सरकारले सुटुक्क सहकारी विधेयक अध्यादेशबाट ल्याएको छ भने पुसको अन्तिम साता लागेर माघ शुरु हुने समयसम्म पनि सरकार हिउँदे अधिवेशनको तयारीको लागि आह्वान गर्न सरकार असफल बनेको छ ।

दुई प्रमुख दल सत्तामा भएकाले सत्तापक्ष दलको जिम्मेवारी संसदमा भएका कानून र विधेयकलाई लामो समय अड्काउन हुँदैन । तर, विडम्बना लामो समयदेखि संसद् र समितिमा यी अड्किएर बसेका छन् । यसैले आउने संसदमा विधेयक पारित गर्नका लागि ताकेता गरौं । जटिलता छ भने फुकाउनका लागि सहजीकरण गरौं भनेर कार्यदल बनाइएको हो,' परियारले भने, 'सरकारले आफ्नो प्रभावकारिता देखाउन समयमै प्रभावकारी अग्रसरता लिनुपर्छ । यो संसद्को मात्रै काम होइन, सरकारले जत्ति बढी चासो लिन्छ, उत्ति छिटो काम हुन्छ । कानून नभएर जनताले नै दुःख पाउनुपर्ने स्थिति नराम्रो भएको जीवन परियार बताउँछन् ।

'कानून नै नभएर जनताले दुःख पाएका छन् । सभामुखले नै सरकारले पर्याप्त सहयोग नगर्दा संसद् प्रभावकारी भएन भनेर बोल्नुपर्ने स्थिति आयो,' परियारले भने, 'राष्ट्रिय सभा, प्रतिनिधिसभामा मात्रै १९ वटा विधेयक अड्किएका छन् । अबको अधिवेशनमा यिनलाई पारित गराउने सरकारलाई घच्घच्याउने र समन्वय गर्नेगरी हामी काम गर्छौं ।' कार्यदलले कांग्रेस र एमालेका प्रमुख सचेतक तथा सचेतकहरूसँग छलफल गरी प्राथमिकताअनुसार विधेयक पारित गर्न समन्वय गर्ने जानकारी परियारले दिए ।

'जुन विधेयकका गम्भीरता छ, त्यसलाई बढी हेर्छौं । शिक्षा विधेयक महत्त्वपूर्ण छ, तर यसमा धेरै संशोधन छ । कसरी व्यवस्थित गर्ने भनेर हामी मसिनो गरी हेर्छौं,' परियारले भने, 'सँगै संशोधन थोरै भएर अन्तिम चरणमा पुगेका विधेयकलाई अबको संसद् अधिवेशनबाट पास गर्ने र नयाँका लागि काम अगाडि बढाउन पनि सहजीकरण गर्ने काम गर्छौं ।'

यसरी सत्ता प्राप्तिका लागि दुई ठूला राजनीतिक दलले गरेको साझा सहमति पुरा गर्न नसकेको र आम जनसमुदायमा सरकार प्रति वितृष्णा वागृत हुँदै गएको कारण पनि पुन आम जनसमुदायलाई विश्वस्त पार्न र विपक्षी राजनीतिक दलहरुको लोकप्रियतामा बृद्धि र सत्तारुढ दलहरुको आम जनसमुदाय र दल भित्रै पनि असन्तुष्टी बढ्दै गएको कारण पनि दुई ठूला दलले पुनः नयाँ सयन्त्र बनाएर अबको दिनमा आम जनसमुदायले परिवर्तन महशुश हुने गरी काम गर्ने प्रतिबद्धतामा कतिको बिश्वास योग्य छ, त्यो भने समयले प्रमाणित गर्ने नै छ । तर आजसम्मका जति पनि राजनीतिक दलहरु सत्तामा पुगे तिनले जनता, देश र आर्थिक समृद्धिको लागि कुनै कार्य गर्न नसकेको र दलहरु दलीय स्वार्थमा केन्द्रित हुँदै गएको कारण पनि दुई ठूला दल नेकपा एमाले र कांग्रेसको सत्ता टिकाउन संयन्त्र रुपमा रहेको आम जनसमुदायको

## मध्यपुर....

जीवनशैलीलाई माथि उठाएको बताए । यसले अन्तराष्ट्रिय जगतलाई पनि सन्देश दिएको भन्दै महोत्सव अद्वितिय भएको विचार व्यक्त गरे ।

यस बर्षको मध्यपुर महोत्सवमा योमरी, वः, चटामरी, नेवारी परम्पराथत खाजालगायत स्थानीय परिकारका स्थल राखिएका कक्षमा अवलोकनकर्ताको बढी उपस्थिति देखिन्थ्यो । महोत्सवमा आउनेहरूको आकर्षण ऐला, थ्वँदेखि नेवारी परिकारका खानाका स्टलमा बढी देखिएको थियो । अवलोकनका लागि संघीय सांसद, प्रदेश सांसद, उपत्यकाका विभिन्न नगरपालिकाका प्रमुख तथा उपप्रमुख, विभिन्न राजनीतिक दलका नेता तथा जनप्रतिनिधिलगायत आन्तरिक तथा बाह्य पर्यटकको उल्लेख्य उपस्थिति थियो ।

मध्यपुरथिमिको सम्पदालाई रोजगारी र आयसँग जोडेर अर्थतन्त्रलाई थप गतिशील बनाउने अवधारणाका साथ सुरु भएको महोत्सवले यहाँको आर्थिक समृद्धि हासिल गर्न र पर्यटकीय गतिविधि बढाउन सहयोग पु¥याउने स्थानीयवासीले विश्वास व्यक्त गरेका थिए । महोत्सव अवधिभर नगरको ऐतिहासिक कला, संस्कृति, जात्रा, पर्व र सम्पदाको प्रदर्शन गरिएको थियो, स्थानीय मौलिक खाना, पेसा र उत्पादनको प्रवर्द्धन गर्दै मध्यपुरलाई स्वदेशी तथा विदेशी पर्यटकको गन्तव्यका रूपमा परिचित गराउने महोत्विको उद्देश्य रहेको थियो ।

महोत्सव शङ्खधरचोकबाट सुरु भई विभिन्न कार्यक्रम र प्रदर्शनी गरिँदै बालकुमारी, चपाचो, नगदेश, बोदे, टिगनी, नीलबाराहीसम्मका ऐतिहासिक बस्तीक्षेत्रमा गतिविधिसहित सञ्चालन भएको थियो । 'मध्यपुरलाई पर्यटकीय गन्तव्यका रूपमा परिचित गराउन २ दशक पछि आयोजना गरेको महोत्सवमा नगरभित्र पाँच सयभन्दा बढी स्टल रहेका थिए, 'स्थानीय कला, संस्कृति र सम्पदाको प्रदर्शन गर्ने, स्थानीय मौलिक पेसा, परिकार र उत्पादनको प्रवर्द्धनलाई जोड दिएका थिए ।

एक सय पाँच ठाउँमा घरेलु उत्पादनका सामान, विभिन्न २५ प्रकारका नाचका साथै माटाका भाँडा बनाउने कला प्रदर्शनी, प्रत्येक पाटीपौवामा दाफाभजनलगायत कला, संस्कृति समावेश गरिइएको थियो । थिमिमा २६ वटा सांस्कृतिक बाजागाजा, ५० पार्टीमा दाफाभजन, भगवान् गौतमबुद्धको अस्तुधातु, चपाचोको पाटी विहार र नगदेशको बुद्ध विहारमा प्रदर्शन, थिमि भैलः ताहननीको डमीसँग सेल्फी लिन सक्ने, जिब्रो छेड्ने जात्राको प्रतिमूर्ति प्रदर्शनमा राखिएको थियो ।

लिच्छवीकालदेखि हालसम्मको नेपाली मुद्रा र सिक्का, माटोको करिब पाँच फिट अग्लो सुकुन्दा, नेपालको पहिलो माटोको आशा हिटरको ढोका, टिगनीमा टिकँबजी (चिउरा) को प्रदर्शनी, नगदेशमा सुनको झ्याल, बालकुमारीमा गेडागुडी, नेवारी संस्कृतिमा जन्मदेखि मृत्युसम्मका संस्कार र अन्य चाडपर्वमा उपयोग हुने भोजका परिकारलगायत सामग्री महोत्सवका मुख्य आकर्षणका रूपमा राखिएको थियो । महोत्सवमा यस्तै पुलुकिसी, ईन्द्र अप्सरा, महाकाली, सलँचा, वाःपिज्या, द्योविर, नागचा, जोगीप्याखँ लगायतका नाचहरुले पनि आगन्तुकहरुको ध्यानाकर्षण गराएको थियो ।

स्थानीय परम्परागत नेवाः ज्ञान पनि पर्यटकहरुलाई दिने उद्देश्य भएतापति सो पुरा हुन सकेको देखिएन । तर समग्रमा महोत्सव भव्य रुपमा सफल रहेको अनुभूत स्थानीयले गरेका छन् । साथै स्थानीयको आशा छ यस प्रकारको महोत्सवमा सायको कमी रहेको अनुभूति भने धेरै जसोको रहेको छ । महोत्सव मुख्य गरेर नेवारी परम्परागत खाजाको स्वाद चाख्नेमा केन्द्रित रहेको महोत्सव अवलोकनका लागि आएका आगन्तुकहरुको भनाई रहेको छ ।

साथै महोत्सवमा ल्यायम्ह पुचःको आयोजनामा ३५ थरी विभिन्न परिकारसहितको

## ख्वप....

ख्वप विश्वविद्यालय स्वीकृति पाउनु पर्ने विषयमा आफू सँधै सकारात्मक रहेको बताए ।

ख्वप विश्वविद्यालयको विधेयकलाई पूर्णता दिने विषयमा लामो समयदेखि छलफल चलिरहेको र यसले पूर्णता पाउनुपर्छ भन्ने पक्षमा आफू सहमत रहेको बताउँदै ख्वप विश्वविद्यालय विधेयक मन्त्रिपरिषद्मा पुगेको र त्यहाँ सकारात्मक छलफल भइरहेको जानकारी दिए । विश्वविद्यालयमा बन्द हड्ताल, तालाबन्दी र गुण्डागर्दी स्वीकार्य नभएको बताउँदै उनले विश्वविद्यालयमा हुने अराजनैतिक गतिविधि नियन्त्रण गर्न आवश्यक भएको बताए ।

नेमकिपाका सचिव प्रेम सुवालले सक्षम स्थानीय तहलाई विश्वविद्यालय सञ्चालन गर्न दिनुपर्नेमा जोड दिँदै ख्वप विश्वविद्यालयलाई जनताको विश्वविद्यालयको रुपमा स्थापना गरी देशभरिका विद्यार्थीलाई सहज रुपमा उच्च शिक्षाको अवसर प्रदान गर्ने उद्देश्य रहेको जानकारी दिए । मानव सभ्यताको विकासको सिलसिलामा विश्वविद्यालय नगर राज्यले सञ्चालन गरेको उदाहरणहरू प्रस्तुत गर्दै उनले ख्वप विश्वविद्यालय विधेयक संसदबाट छिटो पारित भए विद्यार्थीले सहज रुपमा उच्च शिक्षा हासिल गर्ने अवसर पाउने बताए । सोही क्रममा भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले भक्तपुर नपाले ख्वप विश्वविद्यालय स्थापना गरी सञ्चालन गर्न भक्तपुर नपा वडा नं. १ सल्लाघारीस्थित १०८ रोपनी जग्गा प्राप्तिको लागि नेपाल ट्रष्टसमक्ष पटक पटक पत्राचार समेत गरिसकेको बताउँदै ख्वप विश्वविद्यालय विधेयक २०८० पारित गर्न आवश्यक पहल एवम् प्रक्रिया अगाडि बढाउन मन्त्री भट्टराईसमक्ष अनुरोध पत्र हस्तान्तरण गरे ।

मन्त्री भट्टराईले भक्तपुर नगरपालिकाद्वारा सञ्चालित ख्वप माध्यमिक विद्यालय, ख्वप कलेज, शारदा क्याम्पस मावि, ख्वप कलेज अफ ल, ख्वप अस्पताल, ख्वप बहुप्राविधिक अध्ययन संस्थान, ख्वप इन्जिनियरिङ कलेज र ख्वप कलेज अफ इन्जिनियरिङलगायतको स्थलगत अवलोकन गरी कलेजहरुबाट प्रवाहित सेवा सुविधा, विद्यार्थी संख्या र भौतिक अवस्थाबारे जानकारी लिएको थियो । मन्त्री भट्टराईलाई सचिव सुवालले पार्टीका प्रकाशनहरु, नगर प्रमुख प्रजापतिले नपाका प्रकाशन र कलेजका प्रकाशनहरु उपहारको

## चन्द....

सार्वजनिक गर्दै नेकपाले झापादेखि कञ्चनपुरसम्म मार्च सञ्चालन गरिने जानकारी दिएको हो ।

भ्रष्टाचार, वैदेशिक हस्तक्षेप, सुकुम्बासी, मिटरब्याज, ऋण आतंक लगायत मुद्दाविरुद्ध यो मार्च चलाइने जानकारी दिइएको छ । पार्टी गठनको १० वर्ष पुगेकाले पार्टीको विचार र प्रस्तावहरूको पक्षमा देशव्यापी अन्तक्रिया गर्ने निर्णय पनि सार्वजनिक गरिएको छ । सँगै आगामी संसदीय चुनाव २०८४ मा भाग लिनेगरी अरु निर्णयहरू पनि भएका छन् ।

'आगामी २०८४ को चुनावलाई राष्ट्रिय स्वाधीनता, उत्पीडित वर्ग, जाति, समुदाय, महिला, युवा विद्यार्थी र नेपाली विशेषताको समाजवादका पक्षमा प्रयोग गर्ने निर्णय गरिएको छ । त्यसका लागि जनतालाई स्पष्ट सन्देश दिन पार्टी दर्ता गरेर उपयुक्त चुनाव चिन्ह लिइनेछ', वक्तव्यमा भनिएको छ । नेकपाले क्रान्तिकारी पार्टीहरूसँग एकताको उद्देश्य राखेर मोर्चामा सहकार्य गर्ने निर्णय पनि गरेको छ ।

बैठकले कोसी प्रदेशलाई 'किराँत लिम्बुवान' प्रदेश नामकरण गर्न राजनीतिक शक्तिहरूसँग छलफल बढाउने निर्णय गरेको छ । विप्लवको पार्टीले उपत्यकामा सी व्यापार केन्द्र सञ्चालनमा ल्याउने पनि निर्णय गरेको छ । पार्टीलाई मात्र होइन, देशलाई नै आत्मनिरभरतासहित समृद्धितिर बढ्न पार्टीले नयाँ आर्थिक मार्गको विचारलाई दृढताका साथ कार्यन्वयन गर्ने,

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

## नेपाली चलचित्र "एक्टरः टेक वन"का नयाँ पोस्टरहरू सार्वजनिक

काठमाडौं । माघ १६ गते रिलिज हुने नेपाली चलचित्र 'एक्टरः टेक वन'का दुई नयाँ पोस्टरहरू र मोशन पोस्टर सार्वजनिक गरिएको छ । चलचित्रको नयाँ ब्रान्डिङको योजना स्वरूप प्रचार सामग्रीको रूपमा यी पोस्टरहरू सार्वजनिक गरिएको निर्देशक राजन भुसालले बताए ।

एक पोस्टरमा प्रमुख कलाकारहरू प्रदिप खड्का, आना शर्मा, दिव्या रायमाझी र, राजबल्लभ कोइरालालाई राखिएको छ भने अर्को पोस्टरमा अभिनेता द्वय खड्का र कोइरालालाई मात्र प्रस्तुत गरिएको छ । विजय बस्यालले डिजाइन गरेका यी पोस्टरले चलचित्रको कथा र चरित्रहरूलाई प्रभावकारी रूपमा चित्रण गर्न प्रयास गरेका छन् । एक पोस्टरले भावनात्मक सम्बन्ध र कथा सम्बन्धित पात्रहरूलाई केन्द्रमा राखेको छ भने दोस्रो पोस्टरले चलचित्रको 'थ्रिलिङ' भागलाई उजागर गरेको छ । पोस्टरको शीर्ष भागमा रहेका अभिनेता प्रदिप खड्का चलचित्रको मुख्य केन्द्रबिन्दु रहेको प्रस्ट हुन्छ । मुख्य पात्रको चोट लागेको अनुहारले यस चलचित्रको कथाको चुनौतीपूर्ण पक्षलाई सङ्केत गर्छ र सिगार समातेको कोइरालाको चरित्रले कथामा शक्तिको खेल रहेको सङ्केत गर्छ । यस अघि यो चलचित्रको टिजरमा सुपरस्टार प्रदिप खड्काका विभिन्न चरित्रहरूको झलक देखाइएको थियो ।

यस चलचित्रबाट अभिनेता कोइराला १० वर्षपछि ठूलो पर्दामा फर्किंदै छन् । दिव्या रायमाझीले यही चलचित्रबाट आफ्नो अभिनय यात्रा सुरु गरेकी छन्, जहाँ उनलाई 'बोल्ड एन्ड ब्यूटिफूल' रूपमा प्रस्तुत गरिएको छ । दिव्या, चर्चित अभिनेता दिलीप रायमाझीकी छोरी हुन्, र उनी अमेरिकाबाट नेपाल फर्केर यो चलचित्रमा अभिनय गर्न थालेकी हुन् ।

यस चलचित्रलाई राजन भुसालले निर्देशन गरेका छन् भने स्क्रिप्ट आकाश बराल र राजन भुसालले लेखेका हुन् । यस चलचित्रमा प्रदिप, आना, दिव्या, राजबल्लभका साथै दिव्य देव, उषा रजक, सुशील सिटौलालगायतका कला

कारहरूको प्रमुख भूमिका रहेको छ । अदृत फिल्म्स् र अ मोती फिल्मको संयुक्त प्रस्तुति रहेको यो चलचित्रमा निर्माता थमन कुमार भण्डारी र सह-निर्माता अनीश भुसाल रहेका छन् ।

चलचित्रको छायाङ्कन नरेन्द्र मैनालीले गरेका हुन् भने सम्पादन निमेष श्रेष्ठले गरेका छन् । सङ्गीत हर्कुलस बस्नेत, रोहित शाक्य, र एलिस कार्कीले दिएका छन्, र कोरियोग्राफी शिशिर खाती र किरण थापाले गरेका छन् । पोस्ट-प्रोडक्सन सुपरभाइजर साहिल खान रहेका छन् । यस चलचित्रमा द्वन्द्व निर्देशन अष्ट महर्जनले र कला निर्देशन कृष्णमान तामाङले गरेका छन् ।

## जम्बुलिङ इन्टरनेशनल अवार्ड २०२४ सम्पन्न

काठमाडौ । जम्बुलिङ फिल्मस् प्रा.लिको आयोजनामा जम्बुलिङ इन्टरनेशनल अवार्ड २०२४ शनिबार काठमाडौंमा सम्पन्न भएको छ । जम्बुलिङ इन्टरनेशनल अवार्डको तेस्रो संस्करणको ग्राण्ड फिनाले पुर्व संस्कृति पर्यटन तथा नागरिक उड्डयन राज्य मन्त्री तथा संविधानसभा सदस्य पशुराम तामाङको प्रमुख आतिथ्यता र अवार्डका अध्यक्ष, जम्बुलिङ फिल्मस् प्रा.लिका प्रमुख सञ्चालक राज किङ वाईबाको अध्यक्षतामा सम्पन्न भएको हो ।

यो भन्दा अगाडिको संस्करणहरु जस्तै यसपटकको संस्करण पनि थाइल्यान्डमा उद्घाटन गरिएको थियो र शनिबार काठमाडौमा फिनाले सम्पन्न गरेको हो । अवार्ड विभिन्न ३१ विधालाई प्रदान गरिएको छ । 'पुरानालाई सम्मान, नयाँलाई प्रोत्साहन हाम्रो अभियान'को नारालाई अघि बढाउदै कम्पनीले अवार्ड आयोजना गरेको बताइएको छ । अवार्डको निर्णायक सदस्यहरुमा बरिस्ठ कलाकर्मी पवन वाङ लामा, मित्र डि गुरुङ र रमला पाखिन रहेको हो । कार्यक्रम उद्घोषण भने कलाकर्मी, खेलकुदकर्मी साथै सञ्चारकर्मी करण तामाङले गरेका थिए ।

सर्वोत्कृष्ट नेपाली गीत कम्पोजरमा "तिमीसंग" गीतबाट टीका बोम्जन, सर्वोत्कृष्ट नेपाली म्युजिक भिडियो निर्देशकमा "सुस्तरी सुस्तरी" गीतबाट निकेश खड्का, सर्वोत्कृष्ट नेपाली गीत गायक "लजालु मायालु" गीतबाट उर्गेन दोङ, सर्वोत्कृष्ट छायांकनमा "संकम्बरी" गीतबाट नवराज उप्रेती, मोडर्न तथा पप गीत सर्वोत्कृष्ट गायकमा "मेरो धट्कन" गीतबाट डाउट राई, नेपाली चलचित्र सर्वोउत्कृष्ट निर्देशकमा दुई नम्बरी चलचित्रबाट दिपेन्द्र लामा, नेपाली गीत सर्वोत्कृष्ट गायिकामा घुमि घुमि गीतबाट मिङ्स लामा, नेपाली गीत सर्वोत्कृष्ट मोडलमा विजय दोङ, तामाङ सेलो गीतमा सर्वोत्कृष्ट पुरुष मोडलमा टिकाराज तामाङ, तामाङ चलचित्र सर्वोत्कृष्ट अभिनेत्रीमा रञ्जिता ब्लोन, तामाङ सेलो सर्वोत्कृष्ट गायिकामा सुमिना लो, तामाङ सेलो सर्वोत्कृष्ट गायकमा जीभन बोम्जन, तामाङ म्हेन्दोमाया गीत सर्वोत्कृष्ट गायकमा यु्बि मोङग्रेसा, तामाङ सेलो गीत भिडियो सर्वोत्कृष्ट निर्देशकमा देभ दोर्जे लामा, तामाङ म्हेन्दोमाया गीत सर्वोत्कृष्ट नव गायिकामा ममता तामाङ, तामाङ म्हेन्दोमाया गीत सर्वोत्कृष्ट महिला मोडलमा सुनिता वाईबा, पुरुष तर्फको सर्वोत्कृष्ट मोडलमा रमेश तामाङ, म्हेन्दोमाया गीत सर्वोत्कृष्ट नव गायकमा सुर्य तामाङ, नेपाली चलचित्र सर्वोत्कृष्ट निर्माणमा किरण नेपाली, नेपाली गीत सर्वोत्कृष्ट मिक्सिङका रुपमा डिका गुरुङ, नेपाली गीत सर्वोत्कृष्ट सम्पादनमा जितु तामाङ, गायक नेपफपमा उत्तर लामा, तामाङ चलचित्र सर्वोत्कृष्ट सम्पादनमा विजय दोङ, तामाङ चलचित्र सर्वोत्कृष्ट को(एक्टरमा कुईसाङ रुम्बा, तामाङ चलचित्र सर्वोत्कृष्ट कलाकारमा प्रबल थिङ, नेपाली गीत सर्वोत्कृष्ट महिला मोडलमा प्रतिज्ञा लामा (धनमाया लामा), मोडर्न तथा पप गीतको सर्वोत्कृष्ट डेब्युट मोडलमा अस्कित कार्की, तामाङ सेलो सर्वोत्कृष्ट कम्पोजरमा छेडुप लामा, म्हेन्दोमाया गीतबाट जुरी अवार्ड किर्ती गोम्जा, इनकरेजमेन्ट अवार्ड माया थोकर तामाङ र पब्लिक चोईस अवार्ड सुर्य मम्बा तामाङ, उत्कृष्ट तामाङ फिल्म नायक अमिर दोङ, म्हेन्दोमाया गायिका शान्ती माम्बा, म्हेन्दोमाया गीत छायांकार लोकेन्द्र तामाङ, सह-अभिनेत्री अनिता नेगी तामाङले विजय हासिल गरेका छन् ।

जम्बुलिङ व्यक्तित्व सम्मान २०८१ बाट बरिस्ठ कलाकर्मी तथा समाजसेवी नानी काजी डंगोल, तामाङ कला संस्कृतिकर्मी छिमि मम्बा तामाङ, कराँते खेलाडी सुस्मिता तामाङ , चलचित्रकर्मी नायक धिनेर साक्य, र समाजसेवी तथा कलाकर्मी जी पुनलाई सम्मान गरिएको थियो । जम्बुलिङ फिल्स प्रालीले नेपाली कला सांगीतिक तथा साँस्कृतिक क्षेत्रमा पुर्याएको योगदान प्रति कार्यक्रम सम्बोधन गर्ने क्रममा प्रमुख अतिथि पुर्व मन्त्री तामाङले खुलेर प्रशंसा गरेका थिए ।

## बज्राचार्य अवार्डमा लाइफटाइम अचिभमेन्ट अवार्ड यज्ञमानपतिलाई

काठमाडौं । यस वर्षको वर्ल्ड बज्राचार्य अवार्डमा लाइफटाइम अचिभमेन्ट अवार्ड बौद्ध विद्वान यज्ञमान पति बज्राचार्यलाई प्रदान गरिएको छ । शनिवार काठमाडौंमा सम्पन्न वर्ल्ड बज्राचार्य अवार्डको तेश्रो संस्करणमा बौद्ध विद्वान बज्राचार्यलाई लाइफटाइम अचिभमेन्ट अवार्डबाट सम्मान गरिएको हो । कार्यक्रममा बौद्ध विद्वान बज्राचार्यलाई मूल चक्रेश्वर फनिन्द्र रत्न बज्राचार्यले ट्रफि र प्रमाण पत्र प्रदान गरे ।

सोही कार्यक्रममा बौद्ध विद्वान धम्मावति गुरुमां र मिस्टर काठमाण्डु जेबिन्द्र रत्न बज्राचार्यलाई विशेष सम्मान गरिएको थियो । यस वर्ष विश्वभरीकै विभिन्न विद्यालय, विश्वविद्यालयबाट एसईईदेखि पिएचडी वा सो सरहको तहमा उत्तीर्ण गरेका जम्मा १४६ जना बज्राचार्य कुलपुत्र, कुलपुत्री, कुलवधुहरुलाई सम्मान पत्रसहित र उत्कृष्ट ६७ जनालाई अवार्डको ट्रफी प्रदान गरिएको थियो ।

आयोजक संस्था बज्राचार्य क्लबका अध्यक्ष सर्जु बज्राचार्यले बौद्ध धर्मको संरक्षण, प्रवर्द्धनमा युवा पुस्तालाई आकर्षित गर्न क्लबले विभिन्न कार्यक्रम र गतिविधि गर्दै आएको र सोही क्रममा अवार्डको आयोजना गर्दै आएको बताए । अज्ञानता वा उत्प्रेरणाको कमीले हुन सक्छ, आजको युवा पुस्ता पुर्खाद्वारा स्थापित मुल्य मान्यता, संस्कार हरुबाट बिस्तारै बिमुख हुँदैछ । यस्तै अशमञ्जसमा रहेका युवाहरुलाई आफ्नो पहिचान र कर्तब्यप्रति समेच बनाउन बज्राचार्य क्लबले भुमिका खेल्ने जमर्को गर्दैछ । यसकै एक प्रयास हो "वर्ल्ड बज्राचार्य अवार्ड्स" अध्यक्ष बज्राचार्यले भने । कार्यक्रम संयोजक सुजन बज्राचार्यले विश्वमै प्रशिद्ध बौद्ध धर्मको प्रचार प्रसार साथै अध्ययन अध्यापनको नेतृत्व नेपालीबाटै हुनुपर्नेमा जोड दिए ।

'हाल बज्राचार्य एउटा थरको रुपमा रहेता पनि बिगतमा बौद्ध धर्मको गहिरो अध्ययन र साधनाको सफलताबाट प्राप्त हुने एउटा पदवी हो । अब हामीले बौद्ध धर्ममा आस्थावान सबैलाई साँचो अर्थमा 'बज्राचार्य' बनाउन पर्दछ र बौद्ध धर्म प्रचारप्रसार तथा अध्ययन अध्यापनको नेतृत्त्व हामी नेपालीले लिनुपर्छ' संयोजक सुजनले भने ।

कार्यक्रममा बागमति प्रदेश सांसद साथै पुर्व मन्त्री शैलेन्द्र बज्राचार्य, बागमति प्रदेश सांसद साथै वित्त समिति सभापति नुरज बज्राचार्य,नेवाः देय् दबूका अध्यक्ष पवित्र बज्राचार्य, लुम्बिनी बौद्ध विश्वविद्यालयका उप कुलपति प्रा.डा. सुवर्णलाल बज्राचार्य लगायतको उपस्थिती रहेको थियो ।

शैक्षिक क्षेत्रमा सफलता हासिल गरेका विद्यार्थी साथै बौद्ध धर्मको प्रवर्द्धनमा योगदान दिने ब्यक्तिहरुको सम्मानको लागि भन्दै सन् २०१९ बाट बज्राचार्य क्लबले वर्ल्ड बज्राचार्य अवार्डको सुरुवात गरेको थियो ।

## काठमाडौंमा "चाइना फिल्म डे" आयोजना हुने

काठमाडौं । नेपाल चलचित्र तथा सांस्कृतिक प्रतिष्ठानको आयोजनामा नेपाली र चिनियाँ फिल्मका निर्माताबीच फिल्ममेकिङको अनुभव तथा योजना एक आपसमा साटासाट र प्रवर्द्धन गर्ने उद्देश्यले काठमाडौंमा 'चाइना फिल्म डे' आयोजना हुने भएको छ । आगामी २०२५ को जनवरी ९ मा हुन लागेको समारोहमा चिनियाँ फिल्म निर्माता र कलाकारको प्रतिनिधि मण्डल नेपाल आउने तय भएको छ । काठमाडौंस्थित नेपाल फिल्म एण्ड कल्चरल एकेडेमी र चीनको चाइना फिल्म एडमिनिस्ट्रेसनले संयुक्तरुपमा सो कार्यक्रमको आयोजना गर्न लागेका हुन् ।

सो अवसरमा तीन चिनियाँ फिल्म प्रदर्शन गरिने भएको छ । ती फिल्म निर्माता कम्पनीका तीन जना सदस्य, दुई जना कलाकारसहित चाइना फिल्म एडमिस्ट्रिसनका निर्देशक सु याङ आउने तय भएको छ । यसबारे एकेडेमीले यसैसाता विस्तृत जानकारी दिने अध्यक्ष केपी पाठकले जानकारी दिए । चिनियाँ टोलीले नेपाल पर्यटन बोर्डसँग पनि नेपालमा छायांकनबारे छलफल गर्ने पाठकले बताए । चलचित्र विकास बोर्डसँग पनि सहकार्यबारे बैठक हुने भएको छ । 'नेपाल र चीनबीच कसरी फिल्मको संयुक्त निर्माणमा साझेदारी हुनसक्छ भन्ने बारेमा पनि छलफल हुनेछ,' उनले भने ।

उनीहरूले काठमाडौं दरबार स्क्वायरलगायतका छायांकन लोकेसन पनि भ्रमण गर्ने तयारी छ । चाइना डेमा स्क्रिनिङ गरिने फिल्म र कलाकारबारे केही दिनमा टुंगो लाग्ने जनाइएको छ । ८ जनवरीमा काठमाडौंमा आइपुग्ने टोली १० जनवरीमा फर्किने तय भएको छ । उक्त चिनियाँ टोली नेपालपछि बंगलादेशको ढाकामा हुने फिल्म फेस्टिभलमा सहभागी हुनेछ । नेपालमा चाइना फिल्म डेपछि निकट भविष्यमै चीनमा पनि फिल्म फेस्टिभल गर्ने तयारी भइरहेको पाठकले बताए ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक




वर्ष १८ अङ्क २३ | ने.सं. ११४५ पोहेलाथ्व नवमी | पुस २४ गते बुधबार, २०८१ | 08 Jan. 2025, Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## आन्तरिक लोकतन्त्रको खोजी गर्दै नेतृत्वमाथि प्रश्न

काठमाडौं । नेकपा (एमाले)को जारी केन्द्रीय कमिटी बैठकमा केन्द्रीय सदस्यहरूले आन्तरिक लोकतन्त्रको खोजी गर्दै नेतृत्वमाथि प्रश्न उठाएका छन् । केन्द्रीय कमिटीको बैठकमा पार्टीका पूर्व उपाध्यक्ष भीम रावलको निष्काशन र स्थायी कमिटी सदस्य वृन्दा पाण्डे र केन्द्रीय सदस्य उषाकिरण तिमल्सिनालाई गरिएको कारवाहीको सन्दर्भ जोड्दै केन्द्रीय सदस्यहरूले आन्तरिक लोकतन्त्रको विषयमा प्रश्न उठाएका हुन् । उनीहरुले यसलाई तुरुन्तै फिर्ता लिन आग्रह गरेका थिए । तर उनीहरुको सुनुवाई हुन नपाउदै सुरुमै उनीहरुको कारवाही अनुमोदन गरिएको थियो ।




एमालेमा अहिले अध्यक्ष केपी शर्मा ओली नै सर्वेसवा छ । पार्टी निर्णयहरूमा उनकै चाहना हाबी हुन्छ, उनकै प्रवृत्ति र प्रभावहरूबाट निस्किन्छन् पार्टी निष्कर्षहरू । अहिलेको अवस्था यस्तो छ कि ओलीको रोजाइमा नपरेका नेताहरू सडकमै पुग्छन् भन्ने दृष्टान्त शरु भएको छ । आफ्नो कमजोरी औंल्याइदिने एक/एक नेतामाथि ओलीले कारबाहीको डन्डा चलाउँछन् । त्यसको पछिल्लो उदाहरण हो– लुम्बिनी प्रदेशका एमाले नेता तथा सांसद दुर्गा चौधरी पार्टीबाट निष्कासन । उनलाई पार्टी अध्यक्ष ओली र महासचिव शंकर पोखरेलको आलोचना गरेको भन्दै कारबाही गरियो । चौधरीको दाबी छ– पार्टीका नेताको आलोचना गर्दा कारबाही भोग्नुपर्यो । त्यसो त चौधरी पहिलो नेता होइनन्, जो अध्यक्ष ओलीको कार्यशैलीको आलोचना गर्दा कारबाहीमा परे । एमालेमा थुप्रै त्यस्ता नेताहरू छन्, जसले ओलीको आलोचना गर्दा घोषित वा अघोषित रूपमा कारबाहीको भागीदार बन्नु परिरहेको छ ।

आइतबारको केन्द्रीय कमिटी बैठकमा महासचिव शंकर पोखरेलले १४ वटा सचिवालय बैठक र एउटा पोलिट्ब्युरो बैठकका निर्णय अनुमोदनका लागि पेस गरेका थिए । यसरी पहिला अनुमोदन गर्ने र त्यसपछि छलफल गराउने गरी अपनाइएको बैठकको कार्यविधिमा प्रश्न उठाउँदै केन्द्रीय सदस्य प्रकाश शाहले भीम रावलमाथिको कारबाहीले सुदुरपश्चिममा पार्टीलाई ठूलो क्षति पुग्ने बताएका थिए । आग्रह पूर्वक गरिएको यस्तो कारबाहीमा पार्टीले पुनरवलोकन गर्नुपर्ने धारणा उनले राखेका थिए ।

त्यस्तै अध्यक्ष तथा प्रधानमन्त्री केपी शर्मा ओलीले पार्टी केन्द्रीय कमिटीको आठौं बैठकमा राजनीतिक प्रतिवेदन प्रस्तुत गरेका छन् । पार्टी विधानअनुसार ६-६ महिनामा बस्नु पर्ने केन्द्रीय कमिटी बैठक करिब १ वर्षदेखि बस्न सकेको थिएन ।

केन्द्रीय कमिटीको ७ औं बैठक हुँदा नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड' नेतृत्वको सरकारमा एमाले साझेदार थियो । उक्त गठबन्धन भत्किनुको मुख्य जिम्मेवार प्रचण्डलाई ठहऱ्याउँदै ओलीले राजनीतिक प्रतिवेदन प्रस्तुत गरेका छन् । साथै, गत आषाढमा निर्माण भएको काङ्ग्रेस-एमाले गठबन्धनको प्रतिरक्षा गरेका छन् ।

करिब १ वर्षका राजनीतिक घटनाक्रमलाई समेटिएको र पार्टी नीतिलाई प्रष्ट पार्न खोजिएको प्रतिवेदन ४७ पृष्ठ लामो छ । प्रचण्ड नेतृत्वको गठबन्धन सरकार भत्काएर मुख्य प्रतिस्पर्धी दल नेपाली काङ्ग्रेससँग किन नयाँ गठबन्धन बनाउन पर्यो भन्ने विषयमा प्रतिवेदन केन्द्रित छ । प्रतिवेदनले 'नयाँ राजनीतिक कोर्सको आवश्यकता, औचित्य र अवसर' पुष्टि गर्न जोड दिएको छ ।

यसबारे ओलीको प्रतिवेदनले भनेको छ - नेकपा एमाले र नेपाली काङ्ग्रेस मुलुकका मुख्य प्रतिस्पर्धी शक्ति हुन् भन्ने राजनीतिक यथार्थ हो । तर, हामी मुख्य प्रतिस्पर्धी मात्र हैनौं, मुलुकको लोकतान्त्रिक आन्दोलनका अगुवा, लोकतन्त्रका संस्थापक र मुख्य 'स्टकहोल्डर' पनि हौं । त्यसैले हामीले प्रतिस्पर्धा र सहकार्यका क्षेत्रबारे गम्भीर

बाँकी पेज ७ मा

## स्थानीय तहको सहभागिताविना गुरुयोजना सफल नहुने




काठमाडौं । भूमि व्यवस्था, सहकारी तथा गरिबी निवारण मन्त्री बलराम अधिकारीको प्रमुख आतिथ्यमा काठमाडौं उपत्यकाको दीर्घकालीन सोच निर्धारण तथा बृहत्तर भौतिक विकास गुरुयोजना तर्जुमाबारे कार्यशाला गोष्ठी आइतबार सम्पन्न भयो । काठमाडौं उपत्यका विकास प्राधिकरणको आयोजनामा सम्पन्न उक्त कार्यक्रमको उद्घाटन गर्दै मन्त्री अधिकारीले काठमाडौं उपत्यकाको गुरुयोजना छिटै कार्यान्वयन गर्न सक्ने गरी जानुपर्ने बताउँदै स्थानीय तहको सहभागिताविना योजना सफल नहुने बताए । काठमाडौं उपत्यका विश्वकै आकर्षक ठाउँको रुपमा विकास गर्न सकिने भन्दै उनले उपत्यकाको अव्यवस्थित बसोबासलाई व्यवस्थापन गर्नेतर्फ जोड दिनुपर्ने बताए । उपत्यकालाई सुन्दर र व्यवस्थित बनाउन योजना बनाएर अगाडि बढ्न सरकार तत्पर रहेको बताउँदै उनले उपत्यकाका संस्कृति र

बाँकी पेज ७ मा

## तिब्बतमा शक्तिशाली भूकम्प : ज्यान गुमाउनेको संख्या ९५ पुग्यो



काठमाडौं । चीनको तिब्बतस्थित शिगात्से क्षेत्रलाई केन्द्रबिन्दु बनाउँदै मंगलबार बिहान गएको शक्तिशाली भूकम्पबाट मृत्यु हुनेको संख्या ९५ पुगेको छ ।

चिनियाँ समाचार एजेन्सी सिन्ह्वाका अनुसार भूकम्पमा अहिलेसम्म मृत्यु हुनेको संख्या ९५ पुगेको हो । भूकम्पमा परेर तिब्बतमा मात्रै अहिलेसम्म १३० जना घाइते भएका छन् ।

चिनियाँ भूकम्प मापन केन्द्रले उक्त भूकम्पलाई ६.८ रेक्टर स्केल मापन गरेको छ ।

बाँकी पेज ७ मा

## माघे सङ्क्रान्तिका लागि तोखामा चाकु बनाउन भ्याइनभ्याइ

काठमाडौं । माघेसङ्क्रान्ति अर्थात् माघ १ नजिकिएसँगै तोखाबजारका स्थानीयलाई चाकु बनाउन भ्याइनभ्याइ छ । माघेसङ्क्रान्ति पर्वमा चाकु खाने प्रचलनअनुसार यतिबेला काठमाडौंको तोखाका व्यवसायी चाकु र तिलका लड्डु बनाउन भ्याइनभ्याइ भएको हो ।

विशेष गरी नेवार समुदायमा माघेसङ्क्रान्ति पर्वमा चाकु खाने प्रचलन छ । तोखा नेवार समुदायको मुख्य बस्ती रहेको बजार हो । तोखामा काठमाडौंका अन्यत्र स्थानको तुलनामा माघे सङ्क्रान्तिका लागि चाकु बढी उत्पादन हुने गर्दछ । माघे सङ्क्रान्ति पर्व आउन एक हप्तामात्र बाँकी रहँदा यहाँका उद्यमीलाई चाकु बनाउन भ्याइनभ्याइ देखिन्छ ।

तोखा नगरपालिका वडा नम्बर २ र ३ मा पर्ने तोखा बजारभित्र चाकु उत्पादन गर्ने १४ उद्योग छन् । ती उद्योग वरिपरि यतिबेला मानिसहरूको चहलपहल पनि बढेको देखिएको छ । तोखावासी मात्रै नभई काठमाडौंका अधिकांश पसलेले पनि यहीँबाट चाकु लगि बिक्री गर्ने भएकाले उनीहरूको पनि बाक्लो उपस्थिति देखिन थालेको हो ।

अहिले नै चाकु किन्ने तथा खरिदका लागि 'बुकिङ' गर्न व्यवसायीहरू त्यहाँ पुग्ने गरेका छन् । तोखाको चाकु काठमाडौंका असन, इन्द्रचोक, भक्तपुर, पाटन, कीर्तिपुर र उपत्यका बाहिरको नारायणघाट, पोखरा, बुटवल, विराटनगरलगायत सहरमा बिक्री हुँदै आएको छ । यसैगरी, उक्त चाकु नेवार समुदाय भएको विदेशका विभिन्न मुलुकमा बिक्री वितरण हुन्छ । तोखा परम्परागत चाकु संरक्षण समाजका अध्यक्ष कृष्ण श्रेष्ठ कात्तिकदेखि पुससम्म तोखाका चाकु उद्योगीलाई चाकु बनाउन भ्याइनभ्याइ हुने गरेको बताउँछन् । 'तोखाका चाकु उद्योगीले वार्षिक रू ३० लाखदेखि ४० लाख मूल्य बराबरको चाकु र उखुबाट बन्ने विभिन्न परिकार बिक्रीवितरण गर्दै आएका छन्', अध्यक्ष श्रेष्ठ भन्छन् । नेवारी भाषामा 'तुँ' को अर्थ उखु, 'ख्यः' को अर्थ 'फल्ने ठाउँ' हो । तोखा उखुखेती तथा चाकु उत्पादनका लागि प्रसिद्ध ठाउँ हो । अध्यक्ष श्रेष्ठ तोखामा परम्परादेखि नै उखुखेती हुने र उक्त उखुबाट चाकुलगायत विभिन्न परिकार बनाइने भएकाले पनि तोखाको चाकुको महत्त्व देश र विदेशमा रहेको बताउँछन् ।

नेपालभाषामा 'तु' र 'ख्यः' भन्दाभन्दै उक्त शब्द अपभ्रंश हुँदै 'तोखा' हुन गएको मानिन्छ । तोखा नगरपालिकाको नामकरणसमेत तोखा बजारबाट भएको हो । तोखा नगरपालिकालेसमेत तोखाको चाकु संरक्षणमा काम गरिरहेको छ । तोखा नगरपालिकाले हाल तोखामा 'चाकु स्तम्भ' निर्माणका लागि बजेटसमेत विनियोजन गरिसकेको छ ।

नगरपालिकाका प्रमुख प्रशासकीय अधिकृत शेरबहादुर विसी तोखाको चाकु संरक्षणका लागि तोखाका चाकु उद्योगीलाई चाकु उत्पादनसम्बन्धी तालिम तथा उखु क्षेत्रको भ्रमण गरिसकिएको बताउँछन् । तोखाको चाकु अन्तर्राष्ट्रियस्तरमा 'ब्रान्डिङ' गरिने उनको भनाइ थियो । अहिले तोखामा उखुखेती हराउँदै गएको छ । तोखामा उत्पादन हुने चाकुका लागि आवश्यक पर्ने सख्खर तराईका विभिन्न जिल्लाबाट आउने गरेको छ । पछिल्लो समय तोखाको परम्परालाई जोगाउनका लागि तोखा कृषि शाखाको सहयोगमा तोखाभित्र उखु रोप्न लागिएको छ ।

उक्त कार्यको लागि रू पाँच लाख विनियोजन भइसकेको नगरपालिकाले जनाएको छ । यस्तै, पुस्ता हस्तान्तरणका लागि विभिन्न प्रकारका तालिमसमेत प्रदान गरिने अध्यक्ष

बाँकी पेज ७ मा

## आदिवासी सञ्चार संस्था खुल्छन्, मान्यताको अभावमा विलाउँछन्

**कुमार यात्रु तामाङ**

आदिवासी जनजाति राष्ट्रिय जाति भन्दा फरक जीवन पद्धति भएको राष्ट्रिय र अन्तराष्ट्रिय कानुनबाट मान्यता प्राप्त जाति हुन् । आदिवासीको आफनो सामाजिक संगठन, जीवन यापन गर्ने मौलिक तरिका र आफनो भाषा, संस्कृति, आफनो परम्परा तथा प्रचलन हुन्छन् । आदिवासी जनजातिको आफनो पितृभूमि हुन्छ । जस्लाई परम्परागत भूमि वा थातथलो भनिन्छ । आदिवासीको ऐतिहासिक निरन्तरता हुन्छ । अर्थात पूस्तान्तरण प्रक्रियाले आफनो भूमिमा जीविकाका ज्ञान आर्जन गरेको हुन्छ । यसकारण आदिवासी जनजाति फरक समूदाय हुन् भन्ने बुझ्नु पर्दछ ।

आदिवासी जनजातिलाई विभिन्न मुलुकको राष्ट्रिय र अन्तराष्ट्रिय कानुनहरुले मान्यता दिएको हुन्छ । नेपालमा आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान ऐन, २०५८ ले ६१ आदिवासीलाई अनुसूचि १ मा व्यबस्था गरि मान्यता दिएको छ । यो ऐनले आफनै मातृभाषा भएको, परम्परागत रीतिरिवाज भएको, छुट्टै सास्कृतिक पहिचान भएको, छुट्टै सामाजिक संरचना भएको र लिखित वा अलिखित इतिहाँस भएको जाति वा समुदायलाई आदिवासी भनिन्छ भनेर परिभाषा गरेको छ ।

यसरी नै नेपालको संविधानमा आदिवासीका सन्दर्भमा विभिन्न धारामा सप्रसंग उल्लेख गरी मान्यता प्रदान गरेको छ । संविधानको २९६ मा आदिवासी जनजातिको गौरवमय इतिहास र संस्कृतिको पहिचान, हक हितको संरक्षण र सम्बद्धन तथा आदिवासी जनजाति समुदायको सशक्तिकरणका लागि आदिवासी आयोग गठन गर्ने परिकल्पना गरेको छ । यो धाराा कार्यन्वयनका लागि सरकारले आदिवासी जनजाति आयोग ऐन, २०७४ आएको अवस्था छ ।

संविधानको विभिन्न धाराा तथा उपधारामा आदिवासी, आदिवासी जनजाति, अल्पसंख्यक, सिमान्तीकृत, अतिसमान्तीकृत, लोपोन्मूख समुदायका रुपमा उल्लेख छ। संघ र प्रदेश सभामा आदिवासीको प्रतिनिधित्विको पनि व्यबस्था छ ।

अन्तराष्ट्रिय कानुनको मान्यता

अन्तराट्रिय कानुनहरुले आदिवासी जनजातिका प्रमूख पक्षहरुलाई सम्बोधन गर्ने प्रयास गरेको छ । यी कानुनहरुमा अन्तराष्ट्रिय श्रम संगठन (आइएलओ) महासन्धि नम्बर १६९, आदिवासी जनजातिको अधिकार सम्बन्धी संयुक्त राष्ट्र संघीय घोषणा पत्र, २००७ र जैविक विविधता सम्बन्धी

बाँकी पेज ७ मा

थिमि TIMES

# प्रेस सेन्टर भक्तपुरको तेस्रो अधिवेशन सम्पन्न




भक्तपुर । प्रेस सेन्टर नेपाल जिल्ला समन्वय समिति भक्तपुरले तेस्रो अधिवेशनसँगै नयाँ नेतृत्व चयन गरेको छ । मदन ढुंगानाको अध्यक्षतामा १७ सदस्यीय कार्यसमिति निर्विरोध निर्वाचित भएको हो । गत शनिबार सूर्यविनायकमा सम्पन्न अधिवेशनबाट सिङ्गो कार्यसमिति नै निर्विरोध निर्वाचित भएको निवर्तमान अध्यक्ष संजीप शुभचिन्तकले जनाएका छन् । ७ सदस्यीय पदाधिकारीमा निराजन सिलवाल र रत्नकाजी प्रजापति उपाध्यक्ष, प्रदीप श्रेष्ठ सचिव, निसा कुस्मा र अमृता बुढाथोकी सहसचिव तथा बाबुराम दाहाल कोषाध्यक्ष रहेका छन् ।

अधिवेशनबाट रोशन क्षेत्री र रुपक ढुङ्गाना लगायत केन्द्रीय प्रतिनिधि त्यसैगरी बाबुकाजी श्रेष्ठ र सुरेश श्रेष्ठ लगायतलाई प्रदेश प्रतिनिधि चयन गरिएको बताइएको छ । अधिवेशनमा प्रमुख अतिथि रहेका नेकपा(माओवादी केन्द्र)का महासचिव देव गुरुङले कुर्सी, पद र प्रतिष्ठालाई केन्द्रमा राखी सत्ताधारीहरु शत्रुतापूर्ण ब्यवहारमा ओर्लिएका बताएका छन् । यस्तो प्रवृत्तिले नेतान्याहु जन्मने खतरा औंल्याउदै प्रेस जगतले उनीहरूलाई समयमै सच्याउन सक्नुपर्नेमा नेता गुरुङले जोड दिए । बहुदलमा दलहरूबीच समन्वय हुनुपर्नेमा निशेधको सोच बढ्नु प्रत्युत्पादक हुने उनले प्रष्ट पारे ।

दलाल पूजीवादले सर्वसत्तावादलाई बढावा दिएको बताउदै महासचिव गुरुङले विश्व साम्राज्यबादको लाइन पनि यहीँ भएको उल्लेख गर्दै नेपालमा वर्तमान सरकार गठन यसैको पटाक्षेप भएको आरोप लगाए ।

वर्गीय अन्तर्विरोध पहिचान गरि अघि बढ्नुपर्ने आवश्यकता औंल्याउदै उनले तबमात्र समाजवाद सम्म पुग्न सकिने बिचार ब्यक्त गरे । कार्यक्रममा विशेष अतिथि रहेका प्रेस सेन्टर नेपालका अध्यक्ष बिष्णु सापकोटा जुगलले नेपाल पत्रकार महासंघमा प्रेस सेन्टरलाई सरकार समर्थक दुई ठुला संगठनले रोक्न खोज्दाखोज्दै पनि शान्दार जीत हासिल गरेको भन्दै देशको राजधानी रहेको उपत्यकामै अरु संगठन बढारिएका बताए ।

कार्यक्रममा माओवादी केन्द्रका केन्द्रीय सदस्यहरु देवेन्द्र श्रेष्ठ, डिपी ढकाल, प्रतिमा श्रेष्ठ, जिल्ला संयोजक सुनिल बासु त्यसैगरी प्रेस सेन्टरका उपाध्यक्ष एवम् उपत्यका इन्चार्ज निर्मल ज्ञवाली, अध्यक्ष नवराज दाहाल लगायतको आतिथ्यता रहेको थियो ।

सो अवसरमा वरिष्ठ पत्रकार बलराम थापालाई सहिद बैकुण्ठ हरि स्मृति जनपक्षीय पत्रकारिता पुरस्कार प्रदान गरिएको छ । सहिद बैकुण्ठहरि श्रेष्ठको स्मृतिमा प्रेस सेन्टर नेपाल भक्तपुरले स्थापना गरेको सो पुरस्कार शनिवार वरिष्ठ पत्रकार थापालाई प्रदान गरिएको हो । सो पुरस्कारको राशी रु १० हजार र सम्मान पत्र रहेको छ । थापाले मूलप्रवाह मासिक पत्रिकामार्फत देश, जनता र सर्वहारा वर्गलाई हित पुर्याएको योगदानको उच्च कदर गर्दै पुरस्कार दिइएको प्रेस सेन्टर भक्तपुरले जनाएको छ । कार्यक्रममा नेपाल पत्रकार महासंघमा प्रेस सेन्टरको नेतृत्वमा निर्वाचित पदाधिकारीलाई सम्मान समेत

# स्थानीयबाहेकलाई घरजग्गा खरिद बिक्री बन्द गर्न कानुन आवश्यक



काठमाडौं । शहरी विकासमन्त्री प्रकाशमान सिंहको अध्यक्षतामा काठमाडौं उपत्यकाका नगर प्रमुख एवम् उपप्रमुखहरूसँग प्रस्तावित बागमती कार्ययोजना (२०२४-४४) माथि छलफल कार्यक्रम मंगलबार सम्पन्न भयो । कार्यक्रममा नगर प्रमुख तथा उपप्रमुखहरुले उपत्यकाको सुन्दर भविष्यको लागि स्थानीय बाहेकलाई घरजग्गा खरिद गर्न रोक लगाउने कानुन निर्माण गर्नुपर्ने, बागमती कार्ययोजना प्रकृतिमैत्री रुपमा अघि बढाउनुपर्नेमा जोड दिँदै बागमती करिडोरलाई व्यवस्थित गनुपर्ने तथा हरियाली कायम हुने ढंगले कार्ययोजना निर्माण गर्नुपर्नेमा जोड दिनुभयो। कार्यक्रममा बोल्दै उपप्रधानमन्त्री सिंहले २० वर्षे बागमती कार्ययोजनालाई मूर्त रुप दिन सरोकारवाला निकायहरु आवश्यक छलफल गरी छलफलबाट प्राप्त सुझावहरुलाई समेटेर अगाडि बढ्ने योजना रहेको बताउनुभयो । बागमती कार्ययोजना कार्यान्वयनको सिलसिलामा प्रकृतिमैत्री प्रविधिको प्रयोग गरी अगाडि बढ्नुपर्ने बताउँदै पुर्खाले प्रयोग गरेका प्रविधिहरु पनि प्रयोग गर्न सकिने धारणा राख्नुभयो । भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले काठमाडौं उपत्यकामा बस्ती विकास नियन्त्रणविना बागमती सफाइ अभियान सफल नहुने बताउँदै उपत्यकामा बाहिरका मानिसले घर जग्गा खरिद गर्न नपाउने कानुनी व्यवस्था गर्नुपर्ने र समयअनुसार संघीय राजधानी दाङ जिल्लामा सानुपर्ने जनसंख्या नियन्त्रणका प्रमुख उपायहरु हुन सक्ने धारणा राख्नुभयो । बागमती सभ्यताको लागि अरबौं खर्च भए पनि उपलब्धीमूलक काम हुन नसकेको बताउँदै उहाँले खोला सफा राख्न नगरकोट र शिवपुरी जस्ता पानीको स्रोत भएको क्षेत्रलाई जलाधार क्षेत्र घोषणा गरी त्यसको सुरक्षाको जिम्मा नेपाली सेनालाई दिइनुपर्ने बताउनुभयो । अनियन्त्रित ढंगले अव्यवस्थित प्लटिङको विकास र अध्ययनविना निजी प्लानिङ गर्नेलाई स्वीकृति दिँदा खोलाहरुमा प्रदूषण बढिरहेको बताउँदै उहाँले भक्तपुर नपाले सरसफाइ ऐनबमोजिम विभिन्न कानुन निर्माण गरी काम गरिरहेको बताउनुभयो । ललितपुर महानगरपालिकाका प्रमुख चिरिबाबु महर्जनले कार्ययोजनामा उपत्यकाका सांस्कृतिक सम्पदाहरु संरक्षण गर्ने विषय पनि समावेश हुनुपर्ने बताउँदै खोला सुरक्षाको लागि निर्माण भएका रिटेनिङ वालहरुले विपद् निम्त्याइरहेको बताउनुभयो। वैदेशिक ऋणबाट मुलुकलाई विकास गर्ने नीतिले मुलुक डुब्ने खतरा भएको बताउँदै उहाँले ललितपुर महानपाले कुनै पनि संघ संस्थालाई जग्गा दिने काम बन्द गरेको बताउनुभयो । शहरी विकास मन्त्रालयका सचिव गोपालप्रसाद सिग्देलले २० वर्षे कार्ययोजना उपत्यकाका नगरपालिकाहरुसँग जोडिएको विषय भएको बताउँदै उहाँले छलफलबाट प्राप्त सकारात्मक सुझावहरुाई समेटेर कार्ययोजनालाई पूर्णता दिइने बताउनुभयो । उपत्यकाका नदी प्रणाली संरक्षण र नदी किनारामा भएका सम्पदा संरक्षण कार्ययोजनाका मुख्य विषयहरु भएको उहाँले बताउनुभयो । गोदावरी नपाका प्रमुख गजेन्द्र महर्जनले उपत्यकाका राजकुलोहरु पुन:निर्माण गर्नुपर्ने बताउँदै करिडोर निर्माण गर्ने ठाउँमा भएका बस्तीहरुको व्यवस्थापनतर्फ पनि ध्यान पुर्याउनुपर्ने बताउनुभयो । दक्षिणकाली नपाका प्रमुख मोहन बस्नेतले दक्षिणकालीमा पनि करिडोर निर्माण गर्नुपर्ने बताउँदै आर्थिक प्रगतिसहितको कार्ययोजना आवश्यक भएको बताउनुभयो । बुढानिलकण्ठ नपाका उपप्रमुख अनिता लामाले उपत्यका अति अस्तव्यस्त भइसकेको बताउँदै कार्ययोजनाले आत्मनिर्भरताको बारे पनि सम्बोधन गर्नुपर्ने बताउनुभयो । कार्यक्रममा चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्री, किर्तिपुर नपाका उपप्रमुख शुभलक्ष्मी शाक्य, ललितपुर महानपाका उपप्रमुख मन्जली शाक्य, तार्केश्वर नपाका प्रमुख कृष्णहरि महर्जन, बुढानिलकण्ठ नपाका प्रमुख मिठाराम अधिकारी, नागार्जुन नपाका उपप्रमुख सुशिला अधिकारी, गोकर्णेश्वर नपाका प्रमुख दिपककुमार रिसालले प्रस्ताविक कार्ययोजनाहरुबारे राय-सुझाव प्रस्तुत गर्नुभएको थियो । उक्त कार्यक्रममा अधिकार सम्पन्न बागमती सभ्यता एकीकृत विकास समितिका सी.डी.ई उद्धव नेपाल कार्ययोजनाको उद्देश्यबारे प्रष्ट पार्नुभएको थियो भने आयोजना प्रमुख नारायणप्रसाद भण्डारीले कार्ययोजनाबारे प्रस्तुतीकरण दिनुभएको थियो। कार्यक्रममा शहरी विकास मन्त्रालय भवन विभागका उपमहानिर्देशक रविन्द्र बोहराले पनि बोल्नुभएको थियो ।

# बालकुमारी साकोस २४ औं साधारणसभा सम्पन्न

भक्तपुर । बालकुमारी वचत तथा ऋण सहकारी संस्थाले आफ्नो २४ औं साधारणसभा सम्पन्न गरेको छ । संस्थाले आर्थिक वर्ष २०८०/०८१ मा २ अर्ब १३ करोड ३८ लाख रुपैंयाको कारोवार गर्दै ३ करोड ३३ लाख २० हजार ५ सय रुपैंया खुद नाफा गरेको छ । संस्थाको शनिवार सम्पन्न साधारणसभामा वार्षिक प्रतिवेदन पेश गर्दै अध्यक्ष तुईलाल श्रेष्ठले संस्थाको शेयर पुँजी १३ करोड ७० लाख ९७ हजार ८ सय रुपैंया पुगेको जानकारी दिए ।

साधारण सभाको उद्धाटन राष्ट्रिय सहकारी महासंघ नेपालकी महाप्रबन्धक चित्राकुमारी सुब्बाले गरेको कार्यक्रममा आदर्श मावि लाय्कुमा अध्ययनरत २ जना र बालप्रेमी माविमा अध्ययनरत २ जना गरी ४ जना छात्रछात्रालई नगदसहित छात्रवृत्ति प्रदान गरिएको थियो । त्यसैगरी संस्थाका ज्येष्ठ शेयर सदस्यहरु ४ जनालाई दोसल्ला र नगद सहित सम्मान गरिएको थियो ।

त्यस्तै एसईई परीक्षामा उत्कृष्ट अकं हासिल गरेको शेयर सदस्यका ४ जना छोराछोरीलाई पनि नगद सहित सम्मान गरिएको थियो । साथै शेयर सदस्यहरु मध्ये स्नातकोत्तर तह र पिएचडी उत्तीर्णहरुलाई पनि सम्मान गरिएको थियो । यसैगरी म्ये प्वा खनेगु जात्रामा जिब्रो जिब्रो छेडाएर पशुपतिसम्मको पैदल यात्रा गरेका विरेन्द्रभक्त गजु श्रेष्ठलाई नगद १० हजार नगद सहित विशेष सम्मान गरिएको थियो ।

यस्तै संस्थामा कार्यरत कार्यालय सहायक प्रविण श्रेष्ठ र जुनियर सहायक नानीकेशरी प्रजापतिलाई नगद १० हजार नगदसहित वर्षको उत्कृष्ट कर्मचारी पुरस्कार र व्यवस्थापक सुजेन्द्र श्रेष्ठलाई कदरपत्र प्रदान गरिएको थियो ।

सभामा सचिव पृथ्वीराम श्रेष्ठको वार्षिक प्रगति प्रतिवेदन, कोषाध्यक्ष सुदिप श्रेष्ठले आर्थिक प्रतिवेदन र लेखा संयोजक चन्द्रमोहन जोशीले लेखा सुपरिवेक्षण समितिको प्रतिवेदन प्रस्तुत गरेको थियो । कार्यक्रममा जिल्ला वचत संघ भक्तपुरका सञ्चालक एवं बालकुमारी साकोसका पूर्व अध्यक्ष पञ्चकृष्ण श्रेष्ठ, मध्यपुर थिमि नगरपालिका सहकारी शाखाका प्रमुख अभयन्द्र रञ्जित, जिल्ला सहकारी संघ भक्तपुरका सचिव रामप्रसाद कासुलालगायतका वक्ताहरुले शुभकामना मन्तव्य व्यक्त गरेको थियो ।

# शुभश्री सहकारीको १७ औं वार्षिक साधारणसभा सम्पन्न

भक्तपुर । शुभश्री वचत तथा ऋण सहकारी संस्था लिमिटेडको शनिवार सम्पन्न १७ औं वार्षिक साधारण सभाले सञ्चालक समितिको अध्यक्षमा श्याम सुन्दर कायस्थ सर्वसम्मत निर्वाचित भएको छ। सभाले संस्थाको उपाध्यक्षमा रत्नसुन्दर कायस्थ, सचिवमा सुन्दर बज्राचार्य र कोषाध्यक्षमा तुल्सीमान श्रेष्ठ चयन गरेको छ। यसैगरी सञ्चालक सदस्यहरुमा ज्ञानकृष्ण श्रेष्ठ, काशीभक्त कायस्थ, बालकृष्ण श्रेष्ठ, नन्दलाल श्रेष्ठ र संजिता धुंजु चयन भएको छ । लेखा सञ्योजकमा उत्तम श्रेष्ठ र सदस्यद्धयमा गोपाल न्हा श्रेष्ठ र शुभेच्छा बज्राचार्य छन ।

सभामा संस्थाका अध्यक्ष ज्ञानकृष्ण श्रेष्ठले संस्थाले आर्थिक वर्ष २०८०/०८१ मा ३२ लाख ९० हजार ७ सय ५० रुपैंया खुद वचत गरेको जानकारी दिए । साधारण सभामा सचिव काशीभक्त कायस्थले वार्षिक प्रतिवेदन, कोषाध्यक्ष तुल्सीमान श्रेष्ठले आर्थिक प्रतिवेदन प्रस्तुत गरेको थियो । सभामा ज्येष्ठ सदस्यहरु, बाल वचतकर्ता, इसईई सम्मानका साथै बालकुमारी बाँसुरी खल:लाई पनि नगद र उपहारसहित सम्मान गरिएको थियो ।

सभाको उद्धाटन मध्यपुर थिमि नगरपालिकाका नगर प्रमुख सुरेन्द्र श्रेष्ठले रेको थियो । सभामा भक्तपुर जिल्ला वचत संघका उपाध्यक्ष विरेन्द्रभक्त प्रधानाङ्ग, भक्तपुर जिल्ला वचत संघका लेखा संयोजक बालमुकुन्द उपाध्याय लगायतले सहकारीका बारेमा चर्चा गरेको थियो ।

# आलोचना पछि एनसेलले सुटुक्क बढायो भ्यालिडिटी

काठमाडौं । मोबाइल सेवा प्रदायक कम्पनी एनसेलले रिचार्ज भ्यालिडिटी घटाएको विषयमा सामाजिक सञ्जालमा चर्को आलोचना भएपछि सुटुक्क सच्याएको छ । कम्पनीले आफ्नो वेबसाइट तथा मोबाइल एपमा रिचार्ज कार्डको भ्यालिडिटी बढाएर करिब नेपाल टेलिकम सरह कायम गरेको हो ।




यससँगै अब ५० देखि ९९.९९ रुपैयाँसम्मको रिचार्जमा ग्राहकले ३० दिनको भ्यालिडिटी पाउनेछन् भने १०० देखि १९९.९९ रुपैयाँसम्मको रिचार्जमा ६० दिनको मान्य अवधि दिइएको छ। यसैगरी २०० देखि २९९.९९ रिचार्जमा १४० दिन, ३०० देखि ४९९.९९ सम्मको रिचार्जमा २०० दिन, ५०० देखि ९९९.९९ रुपैयाँसम्मको रिचार्जमा ३६० दिन र १००० वा सोभन्दा माथिको रिचार्जमा ७३० दिनको भ्यालिडिटी कायम गरिएको छ ।

जब कि केही महिना यता कम्पनीले १,००० रुपैयाँको रिचार्जमा ९० दिनको मात्र भ्यालिडिटी दिँदै आएको थियो । त्यस्तै रिचार्जको मान्य अवधि ५० देखि ९९ रुपैयाँसम्मका लागि ७ दिन, ५०० देखि ९९९ सम्म ५० दिन र १००० देखि माथिका लागि ९० दिन राखिएको थियो ।

लामो समयसम्म सिम एक्टिभ रहने हुँदा सित्तैमा इनकमिङ कल मात्र लिने तथा कम्पनीको आम्दानीमा योगदान नदिने ग्राहकलाई निरुत्साहित पार्न एनसेलले भ्यालिडिटी अवधि घटाएको थियो । तर अहिले आएर कम्पनीले सो नीति परिमार्जन गरेको हो ।

# विद्यालय बालबालिकाका लागि मोबाइल प्रयोगमा कडा नियम !



एजेन्सी । केही पश्चिमी तथा पूर्वीय देशका विद्यालयहरूमा मोबाइल फोन प्रतिबन्धित छ । केही वर्षअघिसम्म स्मार्टफोनको प्रयोग सीमित थियो । तर अब हरेक दिन टेक्नोलोजी अपडेट भइरहेकाले स्मार्टफोन बिनाको जीवन कल्पना गर्न गाह्रो छ । बिहान उठ्दादेखि राती सुत्ने समयसम्म सबैजना धेरै कामका लागि यही मोबाइल फोनमा निर्भर हुन्छन् । विद्यालयका बालबालिकाले मोबाइल फोनको सहायताले आफ्नो गृहकार्यसमेत गर्छन् । धेरै विद्यालयहरूले मोबाइल एपमा बालबालिकाको गृहकार्य पनि पठाउँछन् ।

भर्खरै गुजरातको सूरत जिल्लामा कक्षा ८ मा एक विद्यार्थीले आत्महत्या (स्मार्टफोन लत) गरे । उनकी आमाले केही समयदेखि मोबाइल मागेकी थिइन् । यसबाट दुखित युवतीले मृत्युलाई अँगालिन् । यही कुरालाई ध्यानमा राख्दै गुजरात राज्यका शिक्षामन्त्रीले विद्यालयमा मोबाइल फोनको प्रयोगमा प्रतिबन्ध लगाउने निर्णय गरेका छन् । अमेरिका, अष्ट्रेलिया, जापान, चीनलगायत धेरै देशमा विद्यालयमा स्मार्टफोन प्रयोगमा प्रतिबन्ध लगाइएको छ ।

विद्यालयमा फोन ल्याउनमा के समस्या छ ?

विद्यालयमा स्मार्टफोन ल्याउने बालबालिकामा एकाग्रताको कमी देखिएको छ । तिनीहरूको मुख्य फोकस सूचनाहरू, सोशल मिडिया र फोनका खेलहरूमा छ । एक अनुसन्धानमा ७० प्रतिशत शिक्षकले कक्षामा मोबाइल फोनको प्रयोगका कारण बालबालिका पढाइमा ध्यान दिन नसक्ने स्वीकार गरेका छन् । अमेरिकाको न्यूयोर्क, क्यालिफोर्निया र टेक्सास जस्ता राज्यहरूमा कक्षामा फोन चलाउन अनुमति छैन । कुनै विद्यार्थीले फोन ल्याएमा विद्यालय प्रशासनमा बुझाउनुपर्छ ।

कुन देशका विद्यालयहरूमा मोबाइल फोन प्रतिबन्धित छन ?

विश्वका धेरै देशहरूका विद्यालयहरूमा मोबाइल फोनको प्रयोगमा प्रतिबन्ध वा प्रतिबन्ध लगाइएको छ । भारतमा पनि अधिकांश विद्यालयहरूले विद्यार्थीहरूलाई मोबाइल फोन ल्याउन अनुमति दिँदैनन् ।

युरोप

१. फ्रान्सः फ्रान्सका विद्यालयहरूमा मोबाइल फोनको प्रयोग पूर्ण रूपमा प्रतिबन्धित छ ।

२. जर्मनीः जर्मनीका धेरै विद्यालयहरूमा मोबाइल फोनको प्रयोगमा प्रतिबन्ध लगाइएको छ ।

३. इटालीः इटालीका केही विद्यालयहरूमा मोबाइल फोनको प्रयोगमा प्रतिबन्ध लगाइएको छ ।

४. स्पेनः स्पेनका केही विद्यालयहरूमा मोबाइल प्रयोगमा प्रतिबन्ध छ ।

५. पोल्याण्डः पोल्याण्डका विद्यालयहरूमा मोबाइल फोन प्रतिबन्धित छ ।

एशिया

१. चीनः चीनका धेरै विद्यालयहरूमा मोबाइल प्रयोगमा प्रतिबन्ध लगाइएको छ ।

२. जापानः जापानका विद्यालयहरूमा मोबाइल फोन प्रतिबन्ध लगाइएको छ ।

३. दक्षिण कोरियाः दक्षिण कोरियाका विद्यालयहरूमा मोबाइल फोनको प्रयोग प्रतिबन्धित छ ।

४. हङकङः हङकङका विद्यालयहरूमा मोबाइल फोनको प्रयोगमा प्रतिबन्ध लगाइएको छ ।

५. सिंगापुरः सिंगापुरका विद्यालयहरूमा मोबाइल फोन प्रतिबन्ध लगाइएको छ ।

उत्तर अमेरिका

१. क्यानाडाः क्यानाडाका धेरै विद्यालयहरूमा मोबाइल फोनको प्रयोगमा प्रतिबन्ध लगाइएको छ ।

२. संयुक्त राज्य अमेरिकाः धेरै विद्यालयहरूमा मोबाइल फोनको प्रयोग पूर्ण रूपमा प्रतिबन्धित छ ।

# राजनीतिक दलहरु बारम्बार फेल, तैपनि खुल्दैन् जनताको चेत !

● अनुसा थापा

प्रधानमन्त्रीमा पटकपटक एउटै व्यक्ति तर के भयो उपलब्धि ? अहिले जनमानसमा यसबारे व्यापक चर्चा चलेको छ । नेपाली काँग्रेसका सभापति शेरबहादुर देउवा पाँचपटक प्रधानमन्त्री बने । नेकपा एमालेका अध्यक्ष केपी शर्मा ओली र नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल तीन पटक प्रधानमन्त्री भए ।

नेकपा एकीकृत समाजवादी पार्टीका अध्यक्ष माधवकुमार नेपाल, वरिष्ठ नेता झलनाथ खनाल, डा बाबुराम भट्टराईले पनि प्रधानमन्त्रीको पद सम्हाले । विडम्बना के भने जोसुकै पदमा आएपनि देश र जनताको अवस्था उहीँ छ । नेपालको नेताहरु कतिसम्म 'निकम्मा' छन् ? भन्ने हेर्न केही वर्षपछाडि फर्किनुपर्छ ।

२०७० सालमा निर्वाचन गराउन नसकेपछि पूर्वप्रधानन्यायाधीश खिलराज रेग्मीको नेतृत्वमा सरकार गठन गरियो । मन्त्रीहरु पनि कर्मचारी नै भए । विश्वमा पनि यस्तो घटना भएको छैन् होला । पूर्वप्रधानन्यायाधीश प्रधानमन्त्री, रिटायर्ड सहसचिव, उपसचिवहरु मन्त्री । राजनीतिक दलहरु त्यतिबेलै 'फेल' भइसकेका थिए ।

तर, त्यो कुरा जनताले बुझेनन् । रेग्मीले २०७० सालमा निर्वाचन गराएपछि सरकार छोडे, राजनीतिक दललाई नै सरकारको हस्तान्तरण गरे । सो निर्वाचनबाट निर्वाचित भएर आएका जनप्रतिनिधिले नेपालको संविधान बनाए । २०७२ असोज ३ गते संविधान जारी भयो । २०७२ सालको संविधान खारेज गर्नुपर्ने माग जनताको छ ।

संविधानले देशलाई तीन तहमा बाँडेको छ । संघीयताको नाममा खर्च बढाइएको छ । तर, त्यसले खर्च बढाउनुबाहेक केही हासिल हुन सकेको छैन् । पञ्चायती व्यवस्थाले देशमा विकास गर्न सकेन्, विदेशी हस्तक्षेप बढ्यो, खर्च बढ्यो भनेर आन्दोलन गरे । २०४६ सालमा राजनीतिक परिवर्तन भयो ।

पञ्चायती व्यवस्था ढलेर बहुदलीय व्यवस्था आयो । २०४६ सालपछि प्रधानमन्त्री बन्ने नेताहरु धेरै छन् । स्वर्गीय नेता कृष्णप्रसाद भट्टराई, मनमोहन अधिकारी, गिरिजाप्रसाद कोइराला, सूर्यबहादुर थापा, लोकेन्द्र चन्द, सुशील कोइरालालगायत प्रधानमन्त्री भए । पञ्चायती व्यवस्था ढाल्न मुलुकमा भएको आन्दोलनको नेतृत्वकर्ता यिनै हुन् ।

देशमा अहिले लोकतान्त्रिक गणतन्त्रात्मक अवस्था छ । तर,जे सोचेर यो व्यवस्था ल्याइयो, त्यो पुरा हुन सकेन् । छिमेकीको हस्तक्षेप व्यापक बढेको छ । यहाँ केही निर्णय गर्न खोज्यो भने छिमेकीलाई बढी चासो हुन्छ । हस्तक्षेप गर्न आइहाल्छन् । हिजो जे जे मुद्दा उठाएर देशमा आन्दोलन भयो, के त्यो पुरा भयो ?

खर्च झनै बढेको छ । जनताले पहिले एउटा राजा पाल्थें, अहिले त हजारौं राजा भए । विदेशी हस्तक्षेप घट्नुको साटो झन् बढ्दै गएको छ । राजनीतिक दलहरु देश र जनताका लागि होइन्, आफ्नो व्यक्तिगत स्वार्थका लागि आएका हुन् भन्ने पुष्टी नै भइसकेको छ । पार्टी खोल्ने अनि पालैपालो पदमा जाने ।

वर्षौंदेखि यही क्रम चलिरहेको छ । टुक्रे पार्टी बनाउने अनि सरकारमा जान बार्गेनिङ गर्ने । व्यक्तिगत फाइदा लिने । मुलुकमा लोकतान्त्रिक गणतन्त्रात्मक व्यवस्था आयो तर के परिवर्तन भयो ? नेताहरुले जनतालाई के दिन सके ? वैदेशिक रोजगारी ? जतिपनि विकास भएको छ, २०४६ सालअगाडि नै भएको हो ।

राजमार्गहरु पञ्चायती व्यवस्था हुँदा नै खुलेको हो । अहिलेकाले त बनाउन होइन्, बेच्न जानेका छन् । सरकारी सम्पत्ति बेचेर खाइहाले । जनताले २०४६ सालपछि के के विकास भयो ? भनेर नेतालाई सोधे भने उनीहरुले जवाफ दिन सक्दैनन् । देशमा यो व्यवस्था ल्याउन जनताले धेरै संघर्ष गरेका छन् ।

ज्नताका छोराछोरी शहिद बनेका छन् । कतिपय टुहुरा भएका छन् । राजनीतिक दललाई के छ ? कोही गुमाउनुको पीडा थाहा छैन् । नेता भनेका छन्, हावा भाषण ठोकेका छन् । जनतालाई भ्रममा पार्ने, आफू खाइरहने, यो खेल चलिरहेको छ । यहाँ जसले जे गर्छ, आफ्नो व्यक्तिगत स्वार्थको लागि गर्छ ।

पदका लागि नेताहरुले कतिसम्म गर्छन् ? यसको उदाहरण काँग्रेसका सभापति देउवालाई लिएर हुन्छ । गिरिजाप्रसाद कोइरालाले सभापति नछोडेपछि प्रधानमन्त्री खानका लागि देउवाले पार्टी नै फुटाए । २०५४ सालमा एमाले फुटेर माले बन्यो । अहिले पनि एमाले फुटि नै रहेको छ ।

केपी एकातिर, माधव अर्कोतिर । माओवादी त टुक्राटुक्रा भइहाल्यो । पद नपाएपछि पार्टी नै फुटाएर हिँड्नेहरुले देशका लागि बिनास्वार्थ काम गर्छन् ? काँग्रेसका महामन्त्री गगन थापा सँधै ठूला नेताको भ्रष्टाचारको फाइल खोल्ने भ्रष्टाचार राख्छन् । उनले भ्रष्टाचार गरेको फाइलचाँहि किन नखोल्ने ?

स्वास्थ्यमन्त्री भएको बेला भ्रष्टाचार गरेका उनको फाइदाचाँहि कसले खोल्ने ? उनलाई त अमेरिकाको 'एजेण्ट' पनि भन्ने गरिन्छ । राष्ट्रिय स्वतन्त्र पार्टीका सभापति रवि लामिछानेले घुमाउरो भाषामा गगनमाथि आरोप लगाइसकेका छन् । भ्रष्टाचारको छानबिन आफैंबाट शुरु गरौं ।

जोमाथि पहिल्यै दाग लागेको छ, उसले अर्कामाथि औंला ठड्याउन मिल्छ ? जनताको आँखामा कहिलेसम्म छारो हाल्ने ? आफ्नो सम्पत्तिचाँहि सार्वजनिक गर्न नसक्ने अनि अरुमाथि आरोप लगाउँदै हिँड्ने ? धन्न नैतिकताले दिँदो रहेछ । २०७० सालदेखि अहिलेसम्म पटकपटक काठमाडौं निर्वाचन क्षेत्र नम्बर ४ बाट चुनाव जितेका उनले के गरे ?

त्यहाँ गएको बजेटमा उनले भ्रष्टाचार गरेको स्थानीयको आरोप छ । बाखा पाल्ने भनेर करोडौं रुपैयाँ अनुदान पचाएको आरोप उनीमाथि छ । विद्यार्थी संगठनको नेता हुँदा हप्ता उठाएको आरोप उनीमाथि छ । एमसीसी पारित गर्न सबैभन्दा ठूलो भूमिका खेल्ने गगन थापा नै हुन् ।

अरुमाथि एउटा औंला ठड्याउँदा अरु औंला आफैंमाथि तेर्सिन्छ भन्ने उनले बिर्सिएका छन् । २०७९ मंसिर ४ गते प्रतिनिधि तथा प्रदेश सभाको निर्वाचन हुँदा उनले देशको प्रधानमन्त्री आफू भन्दै भोट मागे । त्यहाँका स्थानीयले पत्याए, भोट दिए । तर, अहिलेसम्म प्रधानमन्त्री हुने कुनै सुरसार देखिँदैन् ।

जनतालाई आश्वासन दिने अनि भोट लिएपछि प्रतिबद्धता पुरा नगर्नेहरुलाई कारबाही गर्न देशमा कुनै कानुन छैन् ? यो पनि त विश्वासघात जस्तै हो । गगन थापा अहिले शेखर कोइरालाबाट शेरबहादुरतर्फ सरेका छन् । पदका लागि यता र उता गर्ने क्रम चलिरहेको छ । नेताहरुका लागि देश कमाइ खाने भाँडो र जनता पदमा पुग्ने खुड्किलो भए । यस्ता व्यक्तिहरु अझैपनि देश बनाउँछु भन्दै हिँडेका छन् । जनता उनीहरुको कार्यक्रमा गएर ताली पिटिरहेका छन् । यिनीहरुलाई अब लखेट्ने कि ताली पिटेर भ्रष्टाचार गर्न, देश सकाउन मनोबल बढाइरहने ? जनताको हातमा छ । बैंक तथा वित्तिय संस्था, सहकारी, म्यानपावर, निजी स्कुल, अस्पताल सबैतिर राजनीतिक दलकै लगानी छ ।

पर्दाभित्र बसेर देश लुट्ने, जनताको हरिबिजोग बनाउने खेल चलिरहेको छ । भित्रचाँहि लुट भनेर आफ्ना कार्यकर्तालाई सिकाउने अनि बाहिरचाँहि जनताको गुनगान गाउने । देशका नेताहरु सर्पले काचुली फेर्याभन्दा छिटो आफ्नो बोली फेर्छन् । अरुले खाएको देख्न नसकेकाहरुको चाल जनताले बुझ्न सकेनन् । जसको मूल्य अहिले चुक्ता गरिरहनुपरेको छ ।

# युद्धग्रस्त सुडानमा तीन करोडलाई सहायता

एजेन्सी । संयुक्त राष्ट्रसङ्घले सोमबार २० महिने युद्धपछि सुडानमा आधाभन्दा बढी बालबालिकासहित तीन करोडभन्दा बढी मानिसलाई सहायताको आवश्यकता रहेको बताएको छ । राष्ट्रसङ्घले 'अभूतपूर्व मानवीय सङ्कट' भनेको यस स्थितिमा कूल तीन करोड चार लाख आवश्यकतामा परेका मानिसमध्ये दुई करोड नौ लाख मानिसलाई लक्षित गर्दै चार अर्ब २० करोड डलरको कोष आह्वान गरेको छ । सुडान सेना र अर्धसैनिक र्‍यापिड सपोर्ट फोर्सेस (आरएसएफ) बीच सन् २०२३ अप्रिलमा सुरु भएको युद्धले सुडान टुक्रिएको छ र अनिकालको सङ्घारमा पुगेको छ ।

दशौं हजार मानिस मारिएका छन् र ८० लाखभन्दा बढी आन्तरिक रूपमा विस्थापित भएका छन् । यसले युद्धअघि २७ लाख विस्थापितका अतिरिक्त सुडानलाई विश्वको सबैभन्दा ठूलो आन्तरिक विस्थापन सङ्कटका रूपमा परिणत गरेको छ । युद्धबाट बच्न थप ३३ लाख मानिस सुडानको सीमा पार गरेर भागेका छन् । यसको अर्थ युद्धपूर्व अनुमानित पाँच करोड जनसङ्ख्याको एक चौथाईभन्दा बढी अहिले विस्थापित भएका छन् ।

सुडानका पाँच क्षेत्रहरूमा पहिले नै अनिकाल घोषणा गरिएको छ र मेसम्ममा थप पाँच क्षेत्रमा अनिकाल फैलिने अपेक्षा गरिएको । सुडानमा हाल ८१ लाख मानिस भोकमरीको सँघारमा छन् । सुडानको सेना-समर्थित सरकारले अनिकाल भएको अस्वीकार गरेको छ । यद्यपि सहायता संस्थाहरूले नोकरशाही अवरोध र जारी हिंसाले सहायता पहुँचमा अवरोध भएको गुनासो गरेका छन् ।

सेना र आरएसएफ दुवैमाथि भोकमरीलाई युद्धको हतियारको रूपमा प्रयोग गरेको आरोप लगाइएको छ । द्वन्द्वको धेरैजसो समयमा संयुक्त राष्ट्रसङ्घले यस गरिब उत्तरपूर्वी अफ्रिकी देशमा आफ्नो मानवीय प्रतिक्रियाका लागि लक्षित कोषको एक चौथाई पनि जुटाउन सङ्घर्ष गरेको छ । नागरिकहरूमाथि गरिएका अत्याचारका बावजुद मध्यपूर्व र युक्रेनका द्वन्द्वहरूको छायाँमा परेर सुडानको युद्धलाई प्रायः विश्वको 'बिर्सिएको' युद्ध भनिएको छ ।

# सबैभन्दा धेरै सुन भारतीय महिलासँग

एजेन्सी । सम्पत्ति जोड्नसँगै गरगहनाका लागि पनि सुनको प्रयोग हुन्छ । अझ दक्षिण एशियाका खासगरी भारतीय महिलाहरू त सुनका गहना भनेपछि हुरुक्कै हुन्छन् । भारतीय महिलासँग कति सुन छन् भन्नेबारे एउटा रोचक जानकारी सार्वजनिक भएको छ । विश्व सुन परिषद्ले सार्वजनिक गरेको नयाँ जानकारीअनुसार भारतीय महिलाहरूसँग कुल २४ हजार टन सुन छ । यो भनेको विश्वमा भएका कुल सुनमध्ये ११ प्रतिशत हो ।

यो विश्वमा सबैभन्दा धेरै सुनको मौज्दात भएका ५ देशको जम्मा सुनभन्दा पनि धेरै हो । परिषद्का अनुसार हाल अमेरिकासँग सबैभन्दा धेरै ८ हजार टन सुन रहेको छ । दोस्रोमा जर्मनीसँग ३ हजार ३ सय टन छ भने तेस्रोमा इटालीसँग २ हजार ४ सय ५० टन, चौथो फ्रान्ससँग २ हजार ४ सय टन र रुससँग १ हजार ९ सय टन सुन मौज्दात रहेको छ ।

भारतीय कानुनमा विवाहित महिलाले ५ सय ग्राम सुन राख्न कुनै कर तिर्नुपर्दैन । त्यसैगरी, अविवाहित महिलाले २ सय ५० ग्राम सुन राख्दा कर तिर्नु पर्दैन । पुरुषले भने १ सय ग्रामभन्दा धेरै सुन राख्दा कर तिर्नुपर्छ ।

# ब्यालेस्टिक मिसाइल लञ्च गर्दै ट्रम्पलाई उ. कोरियाको कडा सन्देश



एजेन्सी । अमेरिकी विदेशमन्त्री एन्टोनी ब्लिन्केनले दक्षिण कोरियामा अधिकारीहरूसँग भेट गरिरहँदा उत्तर कोरियाले जनवरी ६ मा ब्यालेस्टिक मिसाइल परीक्षण गरेको थियो । दक्षिण कोरियाली सैन्य स्रोतका अनुसार, "उत्तर कोरियाले पूर्वी सागरको दिशामा एक अज्ञात ब्यालेस्टिक मिसाइल प्रहार गरेको छ ।" मिसाइल करिब ११०० किलोमिटर (६८० माइल) उडेर समुन्द्रमा खसेको थियो । जापानी अधिकारीहरूले यसको पुष्टि गरेका छन् ।

अमेरिकी विदेशमन्त्री एन्टोनी ब्लिन्केन दक्षिण कोरियाको भ्रमणमा रहेका बेला यो परीक्षण भएको हो । उत्तर कोरियाको यो मिसाइल प्रहारको जवाफमा दक्षिण कोरियाले पनि समुद्रमा ब्यालेस्टिक मिसाइल हानेर आफ्नो शक्ति प्रदर्शन गरेको थियो । यो विकासले उत्तर कोरियाको मिसाइल परीक्षणलाई लिएर बढ्दो तनावलाई प्रतिबिम्बित गर्दछ, जबकि अन्तर्राष्ट्रिय समुदायले उत्तर कोरियाको सैन्य परीक्षणहरूमा नजर राख्दछ ।

उत्तर कोरियाले ब्यालेस्टिक मिसाइल परीक्षण गरेपछि दक्षिण कोरियाले आफ्नो सुरक्षा प्रणालीलाई थप मजबुत बनाएको छ । दक्षिण कोरियाली सैन्य स्रोतहरूले भने कि देशले "थप मिसाइल परीक्षणहरूको लागि निगरानी र सतर्कतालाई बलियो बनाएको छ" र प्रतिक्रियामा "अमेरिका र जापानसँग नजिकको समन्वयमा" काम गरिरहेको छ । विशेष कुरा के छ भने यो मिसाइल परीक्षण यस वर्षको पहिलो हो र यो डोनाल्ड ट्रम्पले अमेरिकी राष्ट्रपति चुनावमा पदभार ग्रहण गर्नुभन्दा दुई साताअघि भएको थियो ।

त्यसबेला सियोलमा रहेका अमेरिकी विदेशमन्त्री एन्टोनी ब्लिन्केनले प्योङयाङको यो कदमको निन्दा गरेका थिए । एन्टोनी ब्लिन्केन र उनका दक्षिण कोरियाली समकक्षी जो ताए-युलले सोमबार संयुक्त रूपमा उत्तर कोरियाको क्षेप्यास्त्र परीक्षणको कडा आलोचना गरे । यो विकासले उत्तर कोरियाको सैन्य परीक्षणका कारण बढ्दो क्षेत्रीय तनावलाई प्रतिबिम्बित गर्दछ र अन्तर्राष्ट्रिय समुदायले गहिरो चिन्ता व्यक्त गरेको छ ।



# थिमि टाइम्स

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### संविधान संशोधनको मुद्दा जनताको निराशा चिर्नमा मात्र प्रयोग नहोस् !

नेपालको संविधान, २०७२ को संशोधनको विषयले अहिले निकै चर्चा पाएको छ। नेपाली कौग्रेस र नेकपा एमालेको गठजोडको सरकार यसै विषयमा सहमती गरी पालैपालो सरकारको नेतृत वगर्ने शर्तसहित बनेको थियो । तर कालान्तरमा यो विषय ओझेलमा पर्दै गयो। आम जनमानसमा सरकारको काम कारवाहीलाई लिएर आलोचना राजनीतिक दल प्रति नै अविश्वास बढ्न थालेको र जनतामा निराशाको भावना फैलिदै गएको कारण पुनः संशोधनको विषय उठाइएको आकलन गरिएको छ । तर, अहिले उठाइने विषयवस्तुको सैद्धान्तिक पक्षमा भने ध्यान दिइएको देखिँदैन।

अर्को तर्फ नेकपा एमाले, नेकपा माओवादी केन्द्र र नेपाली कांग्रेस आ-आफ्नो राजनीतिक दलको केन्द्रिय समितिको बैठकमा व्यस्त छन् भने सरकारमा सामेल राजनीतिक दल जनतामा फैलिएको निराशा चिर्नकै लागि पनि पुनः संविधान संशोधनको मुद्दा उठाइरहेको विज्ञहरुको ठम्याई रहेको छ।

यसमा नेपाली कांग्रेसका महामन्त्रीहरूले ५ वर्षसम्म प्रधानमन्त्री फेर्न नमिल्ने प्रावधान संविधानमा राख्नुपर्ने प्रस्ताव सार्वजनिकरूपमा अगाडि सारेका छन् । संसद्को सबैभन्दा ठूलो तथा सत्ताको प्रमुख साझेदार दलका महामन्त्रीहरूको प्रस्तावलाई गम्भीरतापूर्वक लिइनु स्वाभाविकै हो । अहिले देखिएको अस्थिरतालाई नियन्त्रण गर्न सबैभन्दा धेरै बालिग मत ल्याउने दलको नेता ५ वर्षै प्रधानमन्त्री हुने र दोस्रो दल विपक्षमा रहने व्यवस्था संविधानबाटै गर्ने कांग्रेसका महामन्त्रीहरूले राखेका छन्। झट्ट सुन्दा उपयुक्त लागे पनि यो प्रस्ताव सैद्धान्तिक र व्यवहारिक दृष्टिबाट भने अनुपयुक्त देखिन्छ।

वर्तमान संविधानले अपनाएको शासन पद्धति मूलतः संसदीय नै हो। यसैले संसदीय पद्धतिको अभ्यास र मान्यताविपरीत संशोधन गरियो भने यो थप अव्यावहारिक हुनेछ। महामन्त्रीहरुको प्रस्ताव मूलतः सामयिक राजनीतिमा विकृतिहरूबाट प्रेरित देखिन्छ । संसद्को सबैभन्दा ठूलो दल भएर पनि सत्ताको नेतृत्व गर्न नपाएको पीडा पनि सायद यस मार्फत् व्यक्त भएको छ।

संसद्को सबैभन्दा ठूलो दलको नेतालाई सरकार बनाउन नदिएर यसपटक तेस्रो दलको नेताले तीनपटक सरकार बनाए । नेपाली कांग्रेस र नेकपा (एमाले)ले संसदीय मर्मविपरीत जनादेश नपाएको सानो दलको नेतालाई सरकारको नेतृत्व नसुम्पेको भए तेस्रो नेकपा (माओवादी केन्द्र)का अध्यक्ष प्रधानमन्त्री बन्न पाउने थिएनन् । संसदीय शासन पद्धतिको सुन्दर पक्ष नै सरकार परिवर्तन गर्ने सहज संवैधानिक व्यवस्था हो । यसलाई विकृत त सत्ताका लागि जे पनि गर्न तम्सनेहरूले बनाएका न हुन् । यसैले प्रतिनिधि सभामा बहुमत सिद्ध गर्नेले सरकार बनाउने संसदीय अभ्यास खोटी होइन । खोटी त सत्तासँग सिद्धान्त साँट्न तम्सनेहरूको नियत हो ।

यथार्थमा विकृति पद्धतिमा नभएर अहिलेको नेपाली राजनीति र केही हदसम्म समाजको पनि पात्र र प्रवृत्तिमा छ । यसैले निदानको खोजी पनि पद्धतिभन्दा पात्र र प्रवृत्तिमा गर्नुपर्छ । संवैधानिक परिषद्को मर्म नै मर्नेगरी गरिएको 'ओली संशोधन' र 'काइते नियुक्ति', न्याय परिषद्मा नेपाल बारको किचलो वा वरीयता मिचेर मुख्य सचिव बनाउन विशेष पद सिर्जनादेखि राजदूत नियुक्तिसम्ममा विकृतिहरू पद्धतिका उपज नभएर पात्रका प्रवृत्तिबाट उब्जेका हुन् ।

सामयिक राजनीतिमा 'सिद्धान्त'का तुलनामा 'व्यवहार'लाई बढी महत्त्व दिने गरिएको पाइन्छ। सम्भवतः संविधान संशोधनको विषयमा पनि सिद्धान्त गौण बनाउन खोजिएको हुनसक्छ । अहिलेको मुख्य समस्या भनेको राजनीतिक दलका नेताहरुको लागि सिद्धान्तविपरीतको सम्झौता नै बनेको छ । जसबाट जहिले पनि र हरेक समय सत्ता भोग गरिरहने र एक आपसमा दाषारोपण गर्दै आम जनतालाई गुमराहमा पार्ने रणनीति बर्तमान राजनीतिक दलको रहेको विगतको राजनीतिक दलको सत्तामा जानका लागि अपनाइएको प्रवृतिबाट पनि स्पष्ट देखिएको छ । यसर्थ सिद्धान्त, अभ्यास र मान्यताविपरीत संशोधन गरियो भने जनताका प्रतिनिधिले पारित गरेका संविधान कागजको खोस्तामा बन्न सक्दछ तसर्थ पनि संविधान संशोधनको बहस देश जनता र भावी समृद्ध नेपालको लागि होस् । साथै हाल नेकपा माओवादीले अगाडि सारेको जनताबाट प्रत्यक्ष निर्वाचित सरकार प्रमुखको अवधारणाका बारेमा पनि सोच्न जरुरी छ । तर राजनीतिक दलहरुको विगतको रवैयाले यो स्थिति आउने देखिदैन । तसर्थ संविधान संशोधनको मुद्दा मात्र आम जनताको निराशा चिर्नमा मात्र प्रयोग नहोस् ।

# सन्त राष्ट्रपतिको आत्मस्वीकृति-जनता भोको राखेर कसरी टन्न खान सक्छु ?

● संकेत कौइराला

नेपाल र पूर्वी युरोपमा पर्ने देश अल्बानियामा एकै वर्ष बहुदलीय व्यवस्था पुनर्स्थापित भएको हो । यहाँ पञ्चायतविरुद्ध राजनीतिक दलहरुले आन्दोलन गरी लोकतन्त्र स्थापना गरेजस्तै त्यहाँ पनि निरंकुश शासक अनवर होक्साले कायम गरेको शासन व्यवस्था उल्टाउने काम भएको थियो । लोकतान्त्रिक गणतन्त्र अबलम्बन गरेका यी दुवै देशले समान नियति भोग्दै आएका छन् । अहिले समृद्धिको लय समातेको अल्बानियाली जनताको प्रतिव्यक्ति आय चार हजार डलर पुगेको छ ।

बहुदलीय शासन व्यवस्था आएपछि पनि मुलुक पुनः द्वन्द्वमा गएर शान्ति प्रक्रियामा आएको डेढ दशक नाघ्दा पनि नेपाली जनताको जीवनस्तरमा तात्त्विक भिन्नता आएको छैन । शासन सत्ता नेता र तिनका सेवकको व्यवस्थापन गर्ने अखडा बन्दै गएका छन् । खाना, नाना र छानाका मूलभूत विषय राजनीतिको प्राथमिकतामा नपर्दा त्यसको अपजस शासन व्यवस्थाले भोग्नुपरेको छ ।

पदमा हुँदा त ठीकै हो, पदमुक्त भएका नेताहरुको सुविधाका लागि बेहिसाव धनराशि र जनशक्ति खर्च हुने गरेको छ । जनताका प्रतिनिधिहरु जनताबाटै असुरक्षित रहेको छनक दिने गरी सरकारी सेनामेना अघिपछि लगाएर हिँड्ने प्रतिस्पर्धाले राजनीतिप्रति वितृष्णा बढ्दो छ ।

तीन दशकअघि सत्तामा पुगेका नेताहरु अहिलेसम्म सरकारी सेवा सुविधामा लिप्त छन् । नेताहरु सादगी हुन सम्भव छैन ? सरल र सहज जीवनयापनमा उनीहरुको रुचि किन देखिदैन ? फौजी अघि पछि लगाउँदा उनीहरुको राजनीतिक भविष्य कति दीर्घकालीन होला ? यसै सन्दर्भमा लोकतन्त्र स्थापनापछि सत्तामा आएका अल्बानियाका सादगी राष्ट्रपति डा. सली बेरिशाको दैनिकी यहाँ प्रस्तुत गरिएको छ । सन् १९९० को डिसेम्बरमा भएको अल्बानियाको प्रजातान्त्रिक आन्दोलनले अनवर होक्साले कायम गरेको निरंकुश साम्यवादी सरकार विस्थापित गरेको थियो । यो आन्दोलनमा सक्रिय नेतृत्व गर्ने बेरिशा पाँच वर्ष निरन्तर राष्ट्रपति भए ।

सन् १९४४ मा उत्तरी अल्बानियामा जन्मेका यिनी आन्दोलन पूर्वसम्म १९६७ देखि नै तिराना अस्पतालमा सर्जनको रुपमा कार्यरत थिए । यिनकी श्रीमती लिरी डाक्टर थिइन् । उनीहरुका एक छोरी र एक छोरा छन्। यौटा प्रजातान्त्रिक मुलुकको राष्ट्राध्यक्षले कस्तो आदर्शलाई जीवनको अंग बनाउनुपर्छ, त्यो उनको दिनचर्याले स्पष्ट गर्छ । झण्डै एकै समयमा प्रजातान्त्रिक व्यवस्था प्राप्त अल्बानियाका यी राष्ट्राध्यक्षको दिनचर्याबाट हाम्रो देशका नेताले पनि केही सिक्न सकिने देखिन्छ । पढौं दैनिकी उनकै बोलीमा ।

प्रायजसो म बिहान ६ बजे उठ्छु । म राष्ट्रपति हुँ तर तिरानाका नागरिक झैं मेरो पनि पानीको लागि टाईम टेबल छ । बिहान ४ बजेदेखि ७ बजे, मध्यान्ह डेढ बजेदेखि ३ बजे र कहिलेकाहीं साँझ साढे सातदेखि १० बजेसम्म । त्यसकारण दाह्री बनाउन र नुहाउन मैले त्यो समयको ख्याल गर्नै पर्छ ।

मेरी पत्नीले ब्रेकफास्ट तयार गर्छिन- अति सामान्य दही, चीज, कफी बस् । कहिलेकाहीं म अम्लेट पनि खान्छु तर धेरैजसो सुख्खा खाना नखान प्रयास गर्छु । जस्तो म पेटप्रति सजग छु । अल्बानियामा खानाप्रति सौखिन हुन कठिन छ। खाना सबैको लागि अभाव छ । मेरी श्रीमतीले पसल पसल चाहारेर जे पाइन्छ, त्यो खानाको बन्दोबस्त गर्न प्रशस्त समय खर्च गर्नुपर्छ । म कतिपय घरायसी काममा पत्नीलाई मद्दत गर्ने हरप्रयास गर्छु ।

लामा लामा लाइन हुन्छन् । भाउ महँगो हुन्छ । हामीलाई निश्चय नै अलि सजिलो हुन्छ । तर मेरो तलब धेरै छैन । पहिलेका नेताहरुको तलब धेरै हुन्थ्यो । तर मैले पहिला जसरी बस्थें, त्यसरी नै बस्न उत्प्रेरित गरेको छु । सर्वसाधारणले कस्तो जीवन बाँच्छन् ? यस्तै नगरिकन म कसरी तिनीहरुले बाँचेका छन् त्यो थाहा पाउन सक्छु ? म परिवर्तन हुन अस्वीकार गर्छु ।

म डाक्टर हुँदा जुन फ्ल्याटमा बस्थें, त्यसैमा बस्छु । त्यसमा तीनवटा कोठा र यौटा सानो भान्सा कोठा छ । यो धेरै सानो छ । रक्षा मन्त्रालयसंग सम्बन्धित यौटा विशेष टेलिफोन लाइन थपिएको छ, नत्र सबथोक उही नै छ । त्यो ठाउँमा म र लिरि मात्रै डाक्टर थियौं । थुप्रै परिवारका घरमा हामी जान्थ्यौं । तिनीहरु अति नै असल मानिस थिए । हामीबीच राम्रो सम्बन्ध थियो ।

म राष्ट्रपति भवन दैनिक करिब आठ बजे दैनिक गाडीबाट पु-याइन्छु । मलाई तत्कालै चिट्ठीले भरिएका फाइल, प्रश्नहरु र मिटिङका लागि माग गरिएको फाइल दिइन्छ । त्यो क्षणदेखि राति अबेरसम्म म व्यस्त हुन्छु । मेरो देशले अत्यन्त कठिन परिस्थिति झेलिरहेको छ । सरकारको प्रशासन संयन्त्र प्यारालाइसिस भएको छ, अर्थतन्त्र नष्ट भएको छ ।

हामीले खाना र औषधीको लागि अरु देशमा भर पर्नु परेको छ । जनतामा प्रजातन्त्रको प्रतिफल हेर्न अति अधैर्य छन् । स्वतन्त्र व्यापार संघहरुले गएको महिना राम्रो तलबको लागि दबाब दिन हड्ताल गरे । अफसोच हामीले गर्नसक्ने कुनै कुरा छैन ।

यतिका समस्याहरु भएर पनि म हतोत्साही हुन सक्दिन् । यदि तपाई हतोत्साह हुनुभयो भने यहाँ हार्नुहुन्छ । तपाई दन्हो हुनैपर्छ । म साधारणतया हाम्रा जनता असल छन् भन्ने कुरामा विश्वास राख्छु, त्यस्ले अवस्था क्रमशः उत्साहवर्द्धक हुँदै गएको छ । हामीले आगामी दुई तीन महिनामा केही ठोस काम गर्न सक्यौं भने अल्बानियालीहरुले निष्कर्ष निकाल्ने छन- स्थिति परिवर्तन हुँदैछ । राम्रोतर्फ र बितेको अँध्यारो समय पछाडि धकेलिँदैछ ।

मेरो इतिहास अत्यन्त सामान्य छ । मेरो देशले भने डरलाग्दो परिस्थिति भोग्दैछ । त्यसले जनताको स्वतन्त्रता हरण गर्दैछ भन्ने लाग्यो । यसलाई सहन सकिन र सरकार विरुद्ध जाने निर्णय गरें । मेरो व्यक्तिगत महत्वाकांक्षाका लागि होइन, यौटा नागरिकको कर्तव्य पालन गर्नको लागि । सबैभन्दा पहिले मैले श्रीमती र छोराछोरीसँग सल्लाह गरेँ ।

तिनीहरु धेरै चिन्तित भए । तर पछि मेरो कुरा स्वीकारे । त्यसकारण १९८९ देखि मैले लेख लेख्न थालेँ । अन्तर्वार्ताहरु दिन थालें । सरकारविरुद्ध सम्भव भएसम्मका सबै कुरा गर्न थालें । देशभित्र बाहिर पनि । खतरा त निक्कै थियो । राज्यको क्रूरता सबै जान्दथे । हजारौं राजबन्दीहरु थिए । मानव अधिकारमाथि अतिक्रमण गरिएको थियो ।

म कुनै पनि हालतमा प्रजातन्त्र आउने कुरामा ढुक्कै थिएँ, जब हामीले प्रजातान्त्रिक दल बनायौं । प्रदर्शनको बेला रक्तपात हुनसक्ने सम्भावनाप्रति ज्यादै चिन्तित थिएँ । हुन त त्यतिबेला सबथोक विद्यार्थीहरुमै छाड्न सकिन्थ्यो, त्यो सजिलो हुन्थ्यो, तर मैले पहिल्यै निर्णय गरिसकेको थिएँ- म दबाबलाई सामना गर्न प्रतिवद्ध भइसकेको थिएँ, यसलाई मैले कहिल्यै पनि नकारिन ।

दिउँसो दुई बजेसम्म म ती मानिसहरुलाई भेट्छु, जसले मसँग भेट्न चाहेका हुन्छन् । विभिन्न संघ संगठनका प्रतिनिधि र जनसाधारण जो आफ्नै लागि कुरा गर्न आएका हुन्छन् । म भ्याएसम्म धेरैलाई भेट्छु । जसरी डाक्टरले रोगीहरुको कुरा सुन्नुपर्छ, त्यसरी नै मैले मेरा जनताको कुरा सुन्नुपर्छ । त्यतिबेला राष्ट्रपतिलाई खाना खाने फुर्सद पनि हुँदैन ।

अपरान्ह म फेरि कार्यालयको काम गर्न थाल्छु, विदेशी प्रतिनिधिमण्डलसँग भेटघाट इत्यादि । मलाई फूर्तिसाथ कपडा पहिरेर बस्नु जरुरी हो भन्ने लाग्छ । मैले केही थान सुट सिलाएको छु । केही बाहिरबाट किनेर ल्याएको छु । मलाई लाग्छ कपडा छान्न म जान्दछु । त्यसो त मेरी पत्नीले पनि मलाई सल्लाह दिन्छिन् ।

राति आठ बजेपछि मैले अरु बैठकमा सम्मिलित हुनुपर्छ । म न्याय परिषद्को अध्यक्ष हुँ । जसले देशभरिका न्यायालयमा नयाँ अधिकारीहरु नियुक्त गर्ने सम्बन्धी कानुन तर्जुमा गर्दैछ । म सक्दो र सम्भव भएसम्म विकेन्द्रीकरण गर्न चाहन्छु देश चलाउने ठीक ठाउँको लागि ठीक मानिस पाउनै कठिन छ । अल्बानियामा विज्ञ मानिस प्रशस्त छन् । यतिबेलासम्म तिनीहरुले देश छाडिसकेका छैनन तर हामीले तिनलाई सक्दो छिटो खोज्नुपर्छ ।

मैले जिन्दगीमा एक अथवा दुईपल्ट मात्रै होक्सालाई भेटेको छु । म उसको डाक्टर कहिल्यै भइनँ । धेरै मानिसले म उसको डाक्टर हुँ भन्दछन् । उसका लेख र किताब पढ्दा ऊ निक्कै निर्दयी भएको स्पष्ट हुन्छ । उ ठान्दथ्यो- उ सधैं ठीक छ । सबै मानिस उविरुद्ध छन् । उ सबथोक जान्दछ । उ हाम्रो इतिहासको सर्वाधिक वियोगान्त चरित्र हो । हेर्नोस उसको त देशलाई सामना गर्ने कंक्रिट बंकरको सिद्धान्त । तपाई अल्बानियामा जहाँ उभिए पनि बंकर देख्नुहुन्छ । उसले हामीलाई बंकरमा गाडेको थियो ।

राति करिब साढे एघार बजे अथवा मध्यराति म घर ल्याइपुऱ्याइन्छु । मेरी श्रीमतीले मलाई प्रायजसो खाना तयार पारिराखेकी हुन्छिन- हुनसक्छ खुब चिसो मासु, सलाद र लेमोनेटेड । लिरीले नै सबै पकाउने काम गर्छिन् किनने पकाउने शक्ति नै बाँकी रहेको हुँदैन ।

म आफ्नो स्वास्थ्यको विषयमा सचेत छु । मेरो स्वास्थ्यसँग देशको स्वास्थ्य जोडिएको छ । म ज्यादै नै धेरै कफी पिउँछु । तर चिनी विनाको । रोटी वा पाउरोटी नखान कोशिस गर्छु । दिनभर कुर्सीमा बसेर काम गर्दा तौल बढ्ने खतरा हुन्छ । त्यसैले दैनिक व्यायाम पनि मेरा लागि अपरिहार्य छ । घर आइपुग्दा म धेरै थाकेको हुन्छु ।

सिद्धान्तत : मलाई आइतबार छुट्टी मिल्छ तर प्रायजसो आइतबार प्रतिवेदन पढ्न, तयार गर्न तथा अरु बैठक जसलाई टार्नै सकिन्न, त्यसमा सामेल हुनुपर्छ । कहिलेकाहीं हामी पैदल हिड्छौं र साथीभाइकोमा जान्छौं । समय मिलेको खण्डमा म अस्पताल जान्छु । आफ्ना दौंतरीहरुलाई भेट्छु । साथीहरु फोन गरेर ढिलो भेट्न आउँछन् । उनीहरुसँग भेट्दा म आफूभित्र बेग्लै आनन्दको अनुभूति गर्छु । त्यस अलावा संगीत सुनेर आनन्द लिनु मेरो अर्को बाटो हो । संगीतमा क्लासिकल, आधुनिक र रक सबै सुन्छु । कहिलेकाहीँ ऐतिहासिक उपन्यासका पाना पनि पल्टाउँछु । तर पदीय जिम्मेवारीका कारण मलाई पढ्ने सुविधा एकदम कम छ ।

राजनीतिक जिम्मेवारीलाई पनि चिकित्सकीय सेवाकै रुपमा मैले हेरेको छु । पहिला सेवाको दायरा थोरै भएपनि अहिले फैलिएको छु । अझ भनौं म देशको म्यानेजर हुँ । देशलाई घर मान्ने हो भने अभिभावक पनि हुँ । अभिभावकले परिवारका सबै सदस्यका गुनासोको निदान खोज्नुपर्छ । मेरो कामले परिवारका तीनपुस्ता आकर्षित हुन सकेनन भने मैले आर्जन गरेको राजनीतिक दर्शन असफल हुनु पनि हो ।

यसअघिका शासक कसरी फेल भए ? उनीहरु जनताका नजरमा किन बिझाए ? त्यसबारे म जानकार छु । जनतामाथि शासन गर्छु भन्ने सोच नै गलत हो । राजनीतिक उच्चासनमा बस्नेले त समन्वय गर्ने हो । जब जनताले राजनीतिकर्मीलाई आफ्नो प्रतिनिधि बनाएर पठाउँछ भने उ त जनताको वारेस हो नि । यी विषयले मलाई बारम्बार घोचिरहन्छ ।

मैले मुलुकको आर्थिक, राजनीतिक, सामाजिक, सामरिक, कुटनीतिक हरेक विषयमा आफ्नो दृष्टि पुऱ्याउनु पर्छ । क्रान्तिपछि मेरो नेतृत्वमा बनेको सरकारलाई विश्व परिवेशमा साझा धारणा बनाउन पनि मैले दिनरात खट्नु पर्छ । जनताका आवश्यकता विषयले त मलाई सपनामा पनि चैन दिँदैनन् । शुद्ध खानेपानी समेत जनताको पहुँचमा नपुगेको अवस्था छ। विश्वका समृद्ध भनिने मुलुकले पनि आफ्नो पहिलो पाइला शिक्षा र स्वास्थ्यबाटै शुरु गरेका हुन्छन् ।

सुशासन अर्को पेचिलो प्रश्न बनेर मेरा अघि उभिएको छ । जनताले न्याय पाएनन् भने अरु विषय फन्टुस गफ हुन्छन् । पूर्वाधार, रोजगारीका विषय त छँदै छन् । त्यसका लागि राजनीतिक स्थायित्व प्रमुख विषय हो । राजनीतिले उत्पादन गरेको समस्या राजनीतिकै सेकतापले निको पार्नु पर्नेछ । यो उद्देश्य प्राप्तिमा मेरो मात्र प्रयास पर्याप्त हुँदैन । राज्यका हरेक संयन्त्रमा यो हुटहुटी जाग्न आवश्यक छ । थोरै समयभित्र जनताको विश्वास आशामा बदल्न सकिएन भने आत्मघाती हुनेमा म सचेत छु ।

पेशाले म डाक्टर हुँ । पत्नी पनि यही पेशामा छिन् । राजनीतिबाट मुक्त भएपछि घरपरिवार चलाउने माध्यम पनि यही नै हो । मेडिकलमा काम गर्नेका अभ्यास त्यतिकै महत्वपूर्ण हुने भएकाले फुर्सद निकालेर भए पनि म आफ्नो नित्यकर्म छोड्न चाहन्न ।

दुई सन्तानको अभिभावकत्व निभाउन पनि उत्तिक्कै जरुरी छ। व्यस्तताको बहानामा बाबुको सामीप्यलाई ख्याल गरिन भने अर्को पुस्ता आशावादी नहुन सक्छ । त्यो संगै अर्को महत्वपूर्ण विश्व रंगमञ्चमा अल्वानिया देशकै उपस्थिति अग्लो देखाउन मैले ज्ञानको दायरालाई फराकिलो बनाउनु पर्छ । भावनाले मात्रै प्रतिस्पर्धाको उचाई भेट्न कठिन छ ।

अन्तिम निष्कर्ष के हो भने म आफूले दिनभर गरेका कामको विश्लेषण गर्छु । म भविष्यप्रति चिन्तित हुन्न । यसका लागि नयाँपुस्ता तयार छ । तिनीहरु कौशलपूर्ण र पूर्णरुपले तम्तयारको अवस्थामा छन् । म तिनीहरुलाई अत्यन्त प्रेम गर्छु । तिनीहरु देशका भविष्य हुन् । यही मीठो कल्पनामा म निदाउने गर्छु ।

खबरहबबाट

# ‘व्यवसायिक जीवनमा नम्बर मुल्यांकन हुँदैन’ काउन्सिल अध्यक्ष शाह




काठमाडौं । दक्ष युवाहरु स्वदेशमै बसेर काम गर्न अवसर र संभावनाहरु प्रसस्त रहेको नेपाल इन्जिनियरिङ काउन्सिलका अध्यक्ष प्रा.डा. पदम बहादुर शाहीले बताउनु भएको छ । स्वदेशमा प्राविधिक जनशक्तिहरुको माग दिनप्रतिदिन बढिरहेको बताउँदै काउन्सिल अध्यक्ष शाहीले हरेक क्षेत्रमा मेहनत र संघर्ष गर्ने युवाहरुले सफलता प्राप्त गर्ने बताउनु भयो ।

मुनाफारहित सामाजिक शैक्षिक संस्थाका रुपमा सञ्चालित नेपाल इन्जिनियरिङ कलेज (नेक) बाट सिभिल तथा सिभिल एण्ड रुरल इन्जिनियरिङ उत्तिर्ण १९ औं ब्याचका विद्यार्थीहरुलाई विदाई गर्दै प्रा.डा. शाहीले प्राविधिक जनशक्ति खासगरी इन्जिनियर हरुले स्वदेशमै राम्रा अवसरहरु पाउने जिकीर गर्नुभयो । ‘विगतमा भन्दा अहिले इन्जिनियरिङ क्षेत्रमा स्कोप छ। तर, तपाईहरुले कलेजमा अध्ययन गरेको भन्दा बढ्ता मेहनत व्यवसायिक जीवनमा गर्नुपर्छ ।’ इन्जिनियरिङ अध्ययन गर्दैगर्दा असाइनमेन्ट सब्मीट गर्नु भयो, रिपोर्ट बनाउनु भयो भाइबा गर्नुभयो । हामीले पनि त्यही गरेर आएका हौं । तर, तपाईको अबको जीवन भनेको नम्बरमा मुल्यांकन हुँदैन अब तपाईको जीवन एस र नोट हो । कि तपाई पास हुनुहुन्छ कि फेल हुनुहुन्छ ।’ सफल हुनको लागि व्यवसायिक जीवनमा प्रत्येक पल परीक्षा दिइरहनु पर्ने भन्दै प्रा.डा. शाहीले भन्नुभयो ।

आफ्लाई सफल बनाउन समाज र समय अनुसार व्यवसायिक रुपमा ज्ञान अनुसार सीप हुनुपर्ने भन्दै प्रा.डा. शाहीले विश्वविद्यालयको अध्ययनले ज्ञान दिन सकेपनि सीप नदिएको बताउनु भयो । ‘विश्वको कुनैपनि विश्वविद्यालयले ज्ञान दिन्छ सीप दिँदैन, सीप सिक्नका लागि हरेक दिन आफ्नो फिल्डमा पढ्नु पर्छ । नयाँ कुरा जान्नैपर्छ ।’ व्यवसायिक जीवनमा इमान्दारिता, नैतिकता र लगनशीलता अपरिहार्य भएको भन्दै उहाँले देश र समाज बनाउन दक्ष युवा जनशक्तिको महत्वपूर्ण भूमिका रहने बताउनु भयो ।

कार्यक्रमका विशिष्ट अतिथी नेपाल सरकारका पूर्वसचिब तथा नेकका पुर्वप्राध्यापक मनिराम गेलालले नेपालको विकासमा इन्जिनियरहरुको भुमिका रहेको भएपनि सरकारी सेवामा पर्याप्त इन्जिनियरहरु नरहेको बताउनु भयो । नयाँ जनशक्तिलाई अनुभवको अभाव भन्दै अवसर नदिँदा उनीहरु अवसरको खोजीमा बाहिरिँदै गएकोमा चिन्ता व्यक्त गर्दै उहाँले नयाँलाई पनि अवसर दिइनुपर्ने बताउनु भयो । ‘हाम्रो पोलिसीमा कमजोरी छ । कन्सल्टिङ सर्भिसेसका लागि जनशक्ति माग गर्दा पनि १५, २० वर्ष सम्बन्धीत विषयमा काम गरेको अनुभव चाहिने मापदण्ड राख्छौं । नयाँ गोल्डमेडलिस्ट र टपरहरु भने बजारमा काम खोज्दै बस्नुपरेको अवस्था छ । यसलाई चेञ्ज गर्न आवश्यक छ ।’ सुखी नेपाली समुन्नत नेपाल निर्माणका लागि दक्ष प्राविधिक जनशक्ति नै चाहिने भएकाले नयाँलाई अवसर दिइनुपर्ने उहाँको जोड छ ।

गेलालले कामको मुल्यांकन गर्नेहरुको संख्या बढि र काम गर्नेहरुको संख्या कम हुँदा देशलाई घाटा भइरहेको बताउनु भयो । पूर्वाधार निर्माणका क्षेत्रमा बढी आरोपहरु लाग्ने भएकाले पेशागत मर्यादा र इमान्दारिता कायम गर्दै करियर डेभलपमेन्टमा अगाडी बढ्न नव इन्जिनियरहरुलाई शुभकामना दिनुभयो । साथै, नेपालमै केही गर्ने वातावरण बन्दै गइरहेकोले आशावादी भएर मेहनत गर्न सुझाब दिनुभयो । कलेजका प्राचार्य दुर्गाप्रसाद भण्डारीले कलेजबाट उच्च शिक्षा हासिल गरेका विद्यार्थीहरुले व्यवसायिक क्षेत्रमा प्राप्त गर्ने सफलता नै कलेजको सफलता भएको बताउँदै व्यवसायिक क्षेत्रमा मर्यादा र अनुशासन कायम गरेर अगाडी बढ्न अनुरोध गर्नुभयो । ‘तपाईहरु कलेजको ब्राण्ड एम्बेष्डर हो । तपाईहरुले प्राप्त गर्ने सफलता नै हाम्रो सफलता हो । जुनसुकै पदमा रहेर काम गर्दा म नेपाल कलेजको विद्यार्थी हुँ भन्ने नविर्सनु होला ।’ समाज र राष्ट्रसँग जोडिएर काम गर्नुपर्ने भएकाले व्यवसायिक जीवनमा पेशागत इमान्दारिता, नैतिकता र मर्यादा महत्वपूर्ण रहेको भन्दै प्राचार्य भण्डारीले भन्नुभयो ।

कलेज सञ्चालक समिति सदस्य समेत रहनु भएकी प्राध्यापक सावित्री त्रिपाठीले ४ वर्षको अध्ययन समाप्त गरेर ब्यवसायिक जीवनमा प्रवेश गर्दा नैतिकवान भएर अगाडी बढ्नुपर्ने बताउनु भयो । व्यवसायिक जीवनमा नैतिकता र इमान्दारिता ठूलो कुरा भएको जिकीर गर्दै ४ वर्षको पढाईले मात्र अगाडी बढ्न नसकिने भएकोले त्यसपछिको उच्च शिक्षा हासिल गर्न तथा व्यवसायिक जीवनमा हरेक दिन केही न केही सिक्नुपर्ने बताउनु भयो ।

यस्तै कलेजका सहायक प्राचार्य मोहनध्वज केसीले व्यवसायिक जीवनमा प्रवेश गर्ने विद्यार्थीहरुलाई शुभकामना दिँदै कलेजले आउँदा दिनहरुमा पनि जस्तोसुकै सहयोग गर्न तयार रहेको बताउनु भयो । उहाँले इमान्दार र नैतिकवान भएर अगाडी बढ्दा सफलता हासिल गर्न सकिने जिकीर गर्नुभयो ।

विदाई कार्यक्रममा नव इन्जिनियर विद्यार्थीहरुले ४ वर्षे स्नातक तहको अध्ययनका क्रममा विताएका पलहरुको स्मरण गर्दै प्राध्यापकहरु र कलेज परिवारलाई धन्यवाद दिएका थिए । कार्यक्रममा विद्यार्थीहरुलाई विभिन्न अवार्ड र पुरस्कारबाट सम्मानीत गरिएको थियो । चेयरमेयर गोल्ड अवार्ड राजेन्द्र पौडेल र शीतल पाण्डेले प्राप्त गर्दा प्रोग्राम टपर अवार्ड भने राजेन्द्र पौडेल र शीतल पाण्डेले संयुक्त रुपमा र बिबेक भण्डारीले प्राप्त गरेका थिए । कार्यक्रममा विषयगत अवार्डहरु पनि प्रदान गरिएको थियो ।

# जाडो मौसममा शरीर तातो बनाउने यी हुन् १५ खानेकुरा




काठमाण्डौं । जाडो बढेको छ । यस्तो मौसममा शरीरलाई न्यायो पार्न धेरै प्रकारका तातो परीकारहरु खाने गरिन्छ । शरीरको हड्डीसहित रुघाखोकीबाट मुक्त हुन, रोग प्रतिरोधात्मक क्षमता बढाउन पनि विशेष खानेकुरामा ध्यान दिनु पर्ने हुन्छ । यो बेला स्वास्थ्यप्रद तरिकाले कस्तो प्रकारको प्राकृतिक खाद्यपदार्थ उपयोग गर्न सकिन्छ जानकारी लिनु अनिवार्य हुन्छ ।

हामी जाडो मौसममा खान सकिने परीकार तथा खानेकुराको जानकारी दिदैंछौं, जसले तपाईको शरीर न्यायो राख्नुको साथै स्वस्थ र फिट रहन्छ ।

१. सागपात : जाडो मौसममा शरीरका लागी हरियो सागपात सबैभन्दा उत्तम भोजन हो । यसमा फाइबर, फलिक एसिड, भिटामिन सी, पोटासियम, म्याग्नेसियमका साथै अन्य पोषक तत्व पर्याप्त पाइन्छ ।

२. गाजरको खिर/हलुवा : जाडो मौसममा गाजरको हलुवाले शरीरलाई निकै फाइदा पुर्याउने गर्दछ । हलुवाको गाजर बनाउदा“, चिनि, खुवा, अलैंची, दूध, बदाम र घ्यु हालेर कुकरमा गाजरको हलुवा बनाउन सकिन्छ ।

३. तातो भोजन : जाडो मौसममा सामान्यत तातो भोजन सेवन गर्नुपर्छ । यसले शरीरमा तातोपना बढाउनुका साथै चिसोले निष्क्रिय भएको शारीरीक अंगलाई फाइदा समेत पुर्याउदछ ।

४. भुटुनमा तोरी तेल : कम मात्रामा नुनको प्रयोग गरी रिफाइन्ड, जैतुन वा तोरीको तेलमा खाना बनाएमा समेत यसले शरीरमा ताप बढाउने गर्दछ ।

५. पर्याप्त तरल पदार्थ : जाडोमा पसिना कम आएपनि पर्याप्त मात्रामा पानी एवं तरल पदार्थको सेवन गर्नुपर्छ । विशेषत: बालबालिका, गर्भवती महिला तथा प्रौढहरूले चिसो खाद्य पदार्थ वा आइसक्रिम खानु हुदैन ।

६. आलस र तिल : शरीरलाई तातो बनाइराख्न आलस र तिलको सेवन प्रभावकारी मानिन्छ । आलसलाई भुटेर पाउडर बनाई बिहानबेलुका खाने तथा तिललाई दैनिक भोजनमा सामेल गरेमा चिसोबाट बच्न सकिन्छ ।

७. काजु, पिस्ता र बदाम : काजु, पिस्ता र बदाममा रहेको तैलीय गुणले शरीरलाई तातो बनाइराख्छ । अरू सामान्य अवस्थामा भन्दा जाडो सुरु भएपछि काजु, पिस्ता र बदाम बढी खान सकिन्छ ।

८. अदुवा, बेसार : सामान्यतया मसलाका रूपमा प्रयोग गरिने अदुवा र बेसार जाडो समयमा शरीरलाई तातो बनाइराख्न अत्यन्तै गुणकारी मानिन्छ ।

९. चिकेन सुप : यदि तपाई मांसाहारी हुनुहुन्छ भने जाडोमा कुखुराको सुप बनाएर पिउनाले निकै लाभ मिल्छ । कुखुराको मासुले शरीरलाई तातो दिने काम गर्छ । यसले रुघाखोकी समेत निको पार्छ ।

१०. जौ, गहुँ र फापर : जाडोमा भात खानु उपयुक्त मानिदैन, यसले शरीरलाई चिस्याउने काम गर्छ । जाडोमा खाने सबैभन्दा राम्रो अन्न जौ, गहुँ र फापर हो । यि अन्नले शरीरमा तातोपना बनाइ राख्ने गर्दछन् ।

११. लसुन : चिसो भगाउन लसुनलाई निकै राम्रो मानिन्छ । साथै यसले कुनैपनि रोगको संक्रमण हुनबाट बचाउछ । लसुनको सेनव गर्दा भाइरससंग लड्न समेत मद्दत गर्छ ।

१२. मरिच : चिसो मौसममा रुघा, खोकी र ज्वरोसंग लड्नका लागि मरिच निकै प्रभावकारी मानिन्छ । मरीचमा पनि कालो मरीचले शरीरमा तातोपना बढाउनुका साथै रोगसंग लड्ने क्षमता बढाउँछ ।

१३. चिया : जाडो मौसममा चिया, कफि वा हर्बल टी पिउनु निकै लाभदायक हुन्छ ।

१४. गेडागुडी तथा माछा मासु : जाडोमा टुसा पलाएको गेडागुडी तथा माछामासुको सेवन गरेमा चिसो लाग्दैन । साथै छाला रुखो हुनबाट समेत बचाउछ । यिनीहरुले शरीरलाई चाहिने शक्तिको मात्रा प्रदान गर्नुका साथै तापक्रम बढाई चिसोवाट बचाउछ ।

१५. दुध तथा अण्डा : अण्डा वा दूधको नियमित सेवनले हाड मजबुत हुनुका साथै शरीरमा तापक्रम बढाउने काम गर्दछ । यसले शरीरमा अत्यधिक तातोपना बढाई चिसोबाट बचाउछ ।

# बस्ती नै सुटिङ सेट बनाई नेपालभाषा म्यूजिक भिडियो “जित: य:म्ह” निर्माण



काठमाडौं । हालको समय नेपालभाषा म्यूजिक भिडियो क्षेत्रमा सनसनीपूर्ण प्रचारमा आइरहेको कीर्तिपुरको मगन इन्टरटेन्टमेन्टको ब्यानरमा एक बिल्कुलै फरक शैलीको म्यूजिक भिडियो निर्माण भइरहेको छ । मगन इन्टरटेन्टमेन्टको प्राविधिक संयोजनमा रजिन महर्जनको छायांकन, सम्पादन एवं परिकल्पना तथा निर्देशनमा “जित: य:म्ह” बोलको नेपालभाषाको म्यूजिक भिडियोको छायांकन कार्य गत शनिबार सम्पन्न भइसकेको जानकारी निर्देशक रजिन महर्जनले दिएको छ ।

“जित: य:म्ह” गीतको म्यूजिक भिडियो कीर्तिपुर नगरपालिका ९ वडास्थित नगां दाफा खल:को प्रस्तुतिको रुपमा सार्वजनिक हुने भएको छ भने उक्त गीतको गीतकार राजेन्द्र महर्जन हुन् । लोकलयमा आधारित उक्त गीत सन्तोष महर्जनको संगीत संयोजनमा तयार भएको हो भने गायक मथुरा महर्जन तथा दीपा महर्जनले “जित: य:म्ह” गीतमा स्वर दिएको छ ।

“जित: य:म्ह” म्यूजिक भिडियोमा नेपालभाषा कलाकारिता क्षेत्रका चर्चित कलाकार मनोज महर्जनका साथ उदयीमान प्रतिभाशाली कलाकार राष्ट्रिका शाक्यको आकर्षक जोडीको अभिनय समाविष्ट छन् । विक्रम महर्जनको कला निर्देशन, संजीवरत्न शाक्यको प्राविधिक निर्देशनका साथ कलर करेक्सन रहेको उक्त म्यूजिक भिडियोमा सनिशा महर्जनको नृत्य तथा सहायक निर्देशन रहेको छ भने सुरेन्द्र महर्जन तापाख्य:मिले प्रोडक्सन म्यानेन्जमेन्टको जिम्मा लिएको छ ।

छायांकनका लागि नगाउँ बस्तीलाईनै सुटिङ सेटको रुपमा निर्माणका साथै श्रृंगार एवं व्यवस्थापन गरी गत शनिबार “जित: य:म्ह” गीतको म्यूजिक भिडियो छायांकन कार्य सम्पन्न गरिएको हो । कीर्तिपुर नगरपालिका ९ वडा नगाउँ का सम्पूर्ण स्थानीय टोलबासीहरुको उत्साहजनक सहभागिता रहेको उक्त म्यूजिक भिडियो संगीत, कला एवं मनोरञ्जन क्षेत्रमा एक ऐतिहासिक पाईलाको रुपमा स्थापित हुने विश्वास म्यूजिक भिडियो निर्माण पक्षले लिएको छ भने नेवा: मौलिकता जगेर्णाका निम्ति अन्य टोलका बासिन्दाहरुका लागि हौसला प्रदान गर्नमा उत्प्रेरित गर्ने म्यूजिक भिडियो निर्माण पक्षका आशा रहेको छ ।

“जित: य:म्ह” म्यूजिक भिडियो आउँदो माघ १ गते माघे संक्रान्तिका दिन मगन इन्टरटेन्टमेन्टको अफिसियल यूट्युब च्यानलबाट सार्वजनिक हुने जानकारी निर्देशक महर्जनले दिएको छ भने म्यूजिक भिडियो सार्वजनिकीकरण कार्यक्रमको निम्ति कुनै औपचारिक कार्यक्रम गर्ने विषयमा निर्णय हालसम्म नभएको जानकारी पनि दिए ।

“जित: य:म्ह” म्यूजिक भिडियो सार्वजनिकीकरण विषयमा कलाप्रेमी व्यक्तित्वहरुले उक्त म्यूजिक भिडियो कुनै हलमा प्रिमियर नगरी नगाउँकै लाछी टोलमा एक सांस्कृतिक कार्यक्रममा सार्वजनिक गर्न सुझाव दिएको बताएका छन् । गत शनिबार “जित: य:म्ह” म्यूजिक भिडियो छायांकन कार्य अवलोकनका निम्ति कीर्तिपुर नगरपालिका ९ वडा नगाउँ पुगेका कलाकारिता क्षेत्रका विभिन्न व्यक्तित्वहरुका अनुसार मगन इन्टरटेन्टमेन्टले हालसम्म निर्माण गरेका म्यूजिक भिडियोहरुमध्ये “जित: य:म्ह” म्यूजिक भिडियो सर्वोत्कृष्ट म्यूजिक भिडियोको रुपमा स्थापित हुने विषयमा दुईमत नहुने भन्दै आआफ्नो विचार राखेको छ । नेपालभाषा म्यूजिक भिडियो क्षेत्रमा बस्तीलाई नै छायांकन सेट बनाई निर्माण भएको पहिलो म्यूजिक भिडियो “जित: य:म्ह” हो । नगां दाफा खल:को प्रस्तुति “जित: य:म्ह” म्यूजिक भिडियो के कस्तो हुने हो ?

# विश्वका १४ अग्ला हिमाल कहाँ र कसले पहिले चढे ?

निनाम लोवात्ती कुलुङ 'मंगले'

आधिकारिक ढंगले मान्यता प्राप्त आठहजार मिटर अग्ला हिमाल १४ वटा रहेका छन् । हुनत लगभग ६ वर्षदेखि आठहजार मिटरभन्दा माथिका अरु ६ वटा हिमाल थप हुने कुरो भई रहेको छ । र, ती थप हुने ६ वटै नयाँ हिमाल नेपालमै रहेका छन् ।

हुनत: निकट भविष्यमा आधिकारिक ढंगले मान्यता प्राप्त आठहजार मिटर अग्ला हिमाल १४ वटा रहेका छन् । हुनत लगभग ६ वर्षदेखि आठहजार मिटरभन्दा माथिका अरु ६ वटा हिमाल थप हुने कुरो भई रहेको छ ।

नेपाली पर्यटन उद्योगमा विवधिताको प्रचुरता रहेको छ । जस्तै हिमाल आरोहण, पदयात्रा, जलयात्रा, आईस क्लाईम्बिङ, बालुनिङ, रक क्लाईम्बिङ, चराचरुङ्गी अवलोकन, जातजाति र भाषा अध्ययन, मेडिटेसन, योगा, फुल फुल्ने बिरुवाको अध्ययन, जडीबुटी र वनौषधिजन्य बिरुवाहरुको अध्ययन लगायत हजारौं-हजार खाले विवधिता पाइन्छ, नेपालमा । यो लेखमा चाहिँ हिमाल र हिमाल आरोहणबारे अझ त्यसमाथि पनि विश्वका १४ अग्ला हिमाल र ती हिमाल पहिलो पटक कहिले कसले आरोहण गरे ? सो सम्बन्धमा केही लेख्दैछु ।

हुनत: निकट भविष्यमा आधिकारिक ढंगले मान्यता प्राप्त आठहजार मिटर अग्ला हिमाल १४ वटा रहेका छन् । हुनत लगभग ६ वर्षदेखि आठहजार मिटरभन्दा माथिका अरु ६ वटा हिमाल थप हुने कुरो भई रहेको छ । र, ती थप हुने ६ वटै नयाँ हिमाल नेपालमै रहेका छन् ।

अब सुरु गरौं, विश्वका १४ वटा अग्ला हिम चुचुराहरु कस-कसले र कहिले-कहिले चढे ? ती पर्वतारोहीहरु कुन-कुन देशका थिए ? ती १४ अग्ला हिमाल कहाँ-कहाँ छन् ? छोटकरीमा चर्चा गर्ने प्रयास गरिएको छ । १४ वटै हिम चुचुरा एसिया महादेशको हिमालय पर्वतमाला भएर पश्चिमदेखि पूर्व फैलिएको छ । त्यस मध्ये एक तिहाई भू-भाग नेपाल भएर जान्छ भने आठ वटा त (६० प्रतिशत) नेपालमै रहेका छन् । स्मरणीय छ, हिमालय पर्वतमालाको एक तिहाई भागमै विश्वका अग्ला हिम चुचुरो सगरमाथा अर्थात् चोमोलुङमादेखि हालसम्मको आठहजार मिटरमध्ये कम उचाईको हिमाल सिसापाङ्मा (उचाई ८,०१३ मिटर भएको) सम्म रहेका छन् ।

विश्वकै अग्लो हिम चुचुरो सगरमाथा अर्थात् चोमोलुङमा (८,८४८.८६ मिटर) हो भने हो भने, सन् १९५३ मे २९ मा न्युजिल्यान्डका एडमण्ड पर्सिभल हिलारी र नेपालका तेन्जिङ नोर्गे शेर्पाले पहिलोपटक चोमोलुङमा चढेका थिए ।

त्यस्तै विश्वको दोस्रो अग्लो हिमाल काराकोरम-२ (के-टु) हो । यो हिमालको उचाई ८,६११ मिटर रहेको छ । यो हिमाल सन् १९५४ को ३१ जुलाईमा इटालीयन आरोहीद्वय



एकिले कोम्पाग्नोनी र लिनो लेसडेल्लीले पहिलोपटक सफलतापूर्वक चढेका थिए । विश्वको तेस्रो अग्लो हिमालचाहिँ कञ्चनजंघा (सेवालुङसेन्छेलुङ) हो । यो हिमाल नेपालको पूर्वी पहाडी जिल्ला ताप्लेजुङ र भारतको सिक्किम राज्य तथा पश्चिम बंगाल राज्यको दार्जिलिङ जिल्लाको सीमामा रहेको छ भने यो हिमालको उचाई ८,५८६ मिटर हो । यो हिमाललाई बेलायतका पर्वतारोहीद्वय जर्ज ब्यान्ड र जो ब्राउनले पहिलोपटक चढेका थिए ।

साथै विश्वको चौथो अग्लो हिमालचाहिँ ल्होत्से/चे हो । यसको उचाई ८,५१६ मिटर रहेको छ । यो हिमाललाई सर्व प्रथम आरोहण गर्ने काम सन् १९५६, मे १८ मा भएको थियो भने, स्वीटजरल्यान्डका पर्वतारोहीद्वय फ्रिट्ज लुसिंगार र अर्नेस्ट रेइस्टले गरेका थिए । त्यस्तै विश्वको पाँचौं अग्लो हिमाल मकालु हो । यसको उचाई ८,४६३ मिटर रहेको छ भने जिन कोजी, लियोनल टेरे, जिन फ्रान्का, गुइडो म्याग्नान, जिन वोउभियर, सेर्गीकोप, पियरे लेरोक्स लगायत फ्रेन्च र नेपाली ग्याल्जेन नोर्बुलगायतको टोलीले आरोहण गरेका थिए । त्यस्तै विश्वको छैठौं अग्लो हिमाल चो-ओयु हो । यसको उचाई ८,२०१ मिटर रहेको छ । यो हिमाललाई सन् १९५४ अक्टोम्बर १९ मा अस्ट्रियन नागरिकद्वय हर्बर्ट टिची र सेप जेक्लर एवम् नेपाली आरोही पासाङ दावा (लामा) शेर्पाले पहिलोपटक आरोहण गरेका थिए ।

त्यस्तै विश्वको सातौं अग्लो हिमाल हो -'धौलागिरि' । यसको उचाई ८,१६७ मिटर रहेको छ भने, सन् १९६० को, १३ मे मा यो हिमाल आरोहण गरिएको थियो । स्वीटजरल्यान्डका पर्वतारोहीहरु कुर्ट डिम्बर्गर, पिटर डियनर, अर्नेस्ट पोर्म, एलेन सेल्बर, माइकल फोउजर र ह्युगो बेबर र नेपाली आरोहीद्वय नावाङ शेर्पा र निमा शेर्पाले सफलतापूर्वक आरोहण गरेका थिए । त्यस्तै विश्वको आठौं अग्लो हिमालचाहिँ मनास्लु हो भने यो हिमालको उचाई ८,१६३ मिटर रहेको छ । मनास्लु हिमालको प्रथम आरोहणचाहिँ सन् १९५६ मे ९ मा जापानीज पर्वतारोहीहरु तोशीमो इमानिशी, किइसिरो कातो र मिनोरु हिगेता तथा नेपाली ग्याल्जेन नोर्बुले गरेका थिए । विश्वको नवौं अग्लो हिमाल नांगा पर्वत हो । ८,१२६ मिटर उचाई रहेको यो हिमाल पाकिस्तानमा रहेको छ । अस्ट्रियन पर्वतारोही हर्मन बुह्लले सन् १९५३, जुलाई ३ मा पहिलोपटक यो हिमाल चढेका थिए ।

साथै विश्वको १० औं अग्लो हिमाल 'अन्नपूर्ण-१/प्रथम' हो । यो हिमाल नेपालमा रहेको छ भने यसको उचाई ८,०९१ मिटर रहेको छ । स्मरणीय छ, ८,०९१ मिटर अग्लो हिमाल मानव इतिहासमै सर्व प्रथम चढिएको हिमाल पनि हिमाल 'अन्नपूर्ण-१/प्रथम' नै हो । यो हिमाल फ्रान्सका पर्वतारोहीद्वय माउरिस हर्जोग र लुइस लाचेनलले सन् १९५० जुन ३ मा पहिलोपटक सफलतापूर्वक आरोहण गरेका थिए । एवम् प्रकारले विश्वको ११ औं अग्लो हिमालचाहिँ 'गासेरब्रुम-१' हो । यो हिमाल पनि पाकिस्तानमा नै रहेको छ भने, यो हिमालको उचाई ८,०८१ मिटर रहेको छ । यो हिमालको आरोहण सन् १९५८ जुलाई ५ मा अमेरिकन पर्वतारोहीद्वय एन्ड्रयु कोउफम्यान र पिट स्कोइन्डले गरेका थिए ।

त्यस्तै विश्वको १२ औं अग्लो हिमाल ब्रोडपिक हो यो हिमाल पनि पाकिस्तानमै रहेको छ । यो हिमालको उचाई ८,०५१ मिटर हो । यो हिमालको सफल आरोहण सन् १९५७ जुन ९ मा भएको हो । त्यो बेला अस्ट्रियन पर्वतारोहीहरु फ्रिट्ज विन्टरस्टेलजर, मार्कसुक स्मुक, कुर्ट डेइम्बर्ग हर्मन बुलले चढेका थिए । विश्वको १३ औं अग्लो हिमाल 'गासेरब्रुम-२' हो । यो हिमाल पनि पाकिस्तानमा नै रहेको छ भने, यसको उचाई ८,०३५ मिटर हो । सन् १९५६ को जुलाई ७ मा जोसेप लार्क, फ्रिट्ज मोर्भल र हान्स विलेन्डपार्टले पहिलो पटक सफलतापूर्वक चढेका थिए ।

विश्वको १४ औं आठहजार मिटर अग्लो अन्तिम हिमाल 'सिसापाङ्मा' हो । यो हिमालको उचाई ८,०२७ मिटर रहेको छ भने यो हिमाल चीनको स्वशासित क्षेत्र तिब्बत र नेपालको सीमानामा रहेको छ । यो हिमाल सन् १९६४ मे २ मा १० जना चिनियाँ पर्वतारोहीको जम्बो टोलीले आरोहण गरेका थिए । संचारकर्मीबाट

# नगदेश डोजोलाई कराते प्रतियोगिताको उपाधि



भक्तपुर । जिल्ला व्यापी कराते प्रतियोगिताको उपाधि नगदेश डोजोले उचालेको छ । भक्तपुर जिल्ला सितोरियो कराते सङ्घको आयोजनामा भएको प्रतियोगितामा ९ स्वर्ण ३ कांस्य र २ रजतका साथ नगदेश डोजो प्रथम स्थानमा रहन सफल रह्यो । त्यस्तै प्रतियोगितामा ४ स्वर्ण ७ कांस्य र ७ रजतका साथमा भक्तपुर मेन डोजो दोस्रो भएको छ भने २ स्वर्ण ५ रजत र ४ कांस्यका साथ भक्तपुर नगरपालिका डोजो तेस्रो भएको थियो । यस्तै प्रतियोगितामा उदयमान खेलाडीको उपाधि भने एस एस सदनका प्रसून थापा र मदरल्याण्डकी बिपना तसिजुले हात पार्न सफल भए । उत्कृष्ट खेलाडी तर्फ नगदेशका विष्णु थापा र भौखेलकी रुबिना सुलुले हात पारे । प्रतियोगिताको समापन गर्दै बागमती प्रदेश सभा सदस्य सुरेश श्रेष्ठले खेलकुदको विकाससँगै देशको पनि विकास हुने बताउँदै राज्यले नै खेलाडीहरूको लागि हेर्नु पर्ने बताए । स्थानीय तहले खेलकुदको विकासका लागि सक्दो प्रयास गर्नुपर्ने समेत उनले बताए । चाँगुनारायण नगरपालिकाको प्रायोजन रहेको उक्त खेलमा २५ टिमको सहभागिता रहेको सितोरियो कराते सङ्घ भक्तपुरका अध्यक्ष राजन चित्रकारले जानकारी दिएको छ । उनका अनुसार जिल्लाका २५ डोजोबाट ३२५ खेलाडी सहभागी रहेका थिए । तौल समूह अनुरूप खेलाइएको उक्त खेलमा २० केजी देखि ६० प्लस केजी तौल समूहसम्म पुरुष तथा २० केजी तौलदेखि ५५ केजी तौल सम्म महिला गरी १९ खेल खेलाइएको थियो ।

यस्तै महिला तथा पुरुष काता तथा महिला पुरुष टिम कातासमेत खेलमा समावेश भएको सँघका वरिष्ठ उपाध्यक्ष रामशरण त्वातीले जानकारी दिए । खेल डब्ल्यु केएफ, एकेफ र एनकेएफको नियम अनुसार खेलाइएको त्वातीले जानकारी दिए । खेलको उद्घाटन प्रतिनिधिसभा सदस्य दुर्लभ थापाले गरेको थियो । कार्यक्रममा चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्री, खेलाडी दावा लामा, चाँगुनारायण खेलकुद समितिका अध्यक्ष रघु के.सी. सितोरियो कराते भक्तपुरका पूर्व अध्यक्ष प्रकाश चौभडेल, नगरपालिका वडा नम्बर २ का वडा अध्यक्ष सोम प्रधान, पवन भुजु, लगायत खेल क्षेत्रका विभिन्न व्यक्तिहरूको उपस्थिति रहेको थियो ।

# सरकारद्वारा अन्तर्राष्ट्रिय पदक विजेता खेलाडी पुरस्कृत



काठमाडौं (हाम्रो खेलकुद)- प्रधानमन्त्री केपी शर्मा ओलीले साफ महिला फुटबल, एसियन च्याम्पियन्सिप कराते र काभा बिच भलिबल खेलमा पदक विजेता खेलाडी, प्रशिक्षक र व्यवस्थापकलाई पुरस्कृत गरेका छन् ।

युवा तथा खेलकुद मन्त्रालयद्वारा आज प्रधानमन्त्री निवास बालुवाटारमा आयोजित कार्यक्रममा नेपाल सरकार, मन्त्रिपरिषद्को मंसिर २८ गतेको निर्णयबमोजिम तोकिएको मापदण्डका आधारमा पुस्कार प्रदान गरिएको हो ।

प्रधानमन्त्री ओलीको निर्देशनपछि खेल क्षेत्रमा दिइने पुरस्कारमा कर छुट हुँदै आएको छ । कात्तिक १ गतेदेखि १४ गतेसम्म काठमाडौंमा भएको साफ वुमन च्याम्पियनसिप फुटबलमा दोस्रो भएको टोलीकी अमृता जैसी, मुख्य प्रशिक्षक राजेन्द्र तामाङ र व्यवस्थापक वृन्दा देवानलगायत पुरस्कृत गरियो।

टोलीका खेलाडीलाई ३ लाख, प्रशिक्षक तामाङलाई २ लाख, सहायक प्रशिक्षक विनोद डंगोल र भगवती थापालाई समान ६० हजार तथा व्यवस्थापक वृन्दा देवान र फिजियो नवीना श्रेष्ठले समान १ लाख २० रुपैयाँ प्राप्त गरे।

चीनको हाइजाओमा गत वर्षको असोज १ गतेदेखि ७ गतेसम्म भएको २०औं एसियाली कराते च्याम्पियनसिपको रजत पदक विजेता एरिका गुरुङलाई ६ लाख, मुख्य प्रशिक्षक कुशल श्रेष्ठलाई १ लाख ८० हजार रुपैयाँ पुरस्कृत गरिएको छ ।

यस्तै यसै वर्ष साउन १७ गतेदेखि २० गतेसम्म भुटानको थिम्पुमा भएको काभा बिच महिला भलिबल प्रतियोगिताका स्वर्ण पदक विजेता कमला पुन, मनिषाकुमारी चौधरीलाई ५ लाख तथा प्रशिक्षक रुपेशकुमार विष्टलाई ३ लाख रुपैयाँ पुरस्कार प्रदान गरियो । सोही प्रतियोगिता रजत पदक विजेता मानबहादुर श्रेष्ठ र दिल सुनारले समान ३ लाख रुपैयाँ पाउनेछन्।

कार्यक्रममा प्रधानमन्त्री ओलीले विजेतालाई बधाई दिँदै हिम्मत लियो भने खेल जित्न सकिन्छ भन्ने उच्च मनोबल लिएर प्रतियोगितामा लाग्न आग्रह गर्दै खेलमा टिम स्पिरिट र कम्बिनेसन महत्वपूर्ण हुने बताए । युवा तथा खेलकुदमन्त्री तेजुलाल चौधरीले अन्तर्राष्ट्रिय प्रतियोगितामा विजेता भई पुरस्कार दिन बाँकी अन्य खेलाडीहरुको विवरण चाँडो पठाइदिन सम्बन्धित पक्षलाई आग्रह गर्दै आएको जानकारी दिए ।

# भूकम्पको शक्ति नाप्ने रेक्टर स्केल र म्याग्निच्युड के हो ?

काठमाडौं । भूकम्पको धक्कालाई सामान्यतया रेक्टर स्केल वा म्याग्निच्युडले अंकित गरिन्छ । मंगलबार बिहान तिब्बत केन्द्रविन्दु भएर करिब ७ म्याग्निच्युडको भूकम्प गएको थियो । नेपालबाट ७ म्याग्निच्युड भनिए पनि चीनले ६.८ म्याग्निच्युडको बताएको छ । यसअघि २०७२ सालमा आएको विनाशकारी भनेर चिनिएको भूकम्प ७.८ म्याग्निच्युडको रहेको थियो ।

भूकम्प मापनका लागि प्राय सबै देशहरुले आफ्ना उपकरण अर्थात् सिस्मोमिटर राख्ने र भूकम्पको केन्द्र नजिक वा टाढा रहेका उपकरणले मापन गर्दा म्याग्निच्युड वा रिक्टर स्केलको अंक फरक देखिने हुन्छ ।

सामान्यतया अमेरिकाको यूएसजीएस (युनाइटेड स्टेट्स जिओलोजिकल सर्भे) लाई बढी आधिकारिक मान्ने चलन भए पनि तिब्बतमा आएको भूकम्पको आकार चीन वा तिब्बतकै भूकम्पमापन केन्द्रको तथ्याङ्कलाई आधिकारिक मान्नु पर्छ ।

यसैलाई नेपालबाट एउटा, चीनबाट अर्को र अमेरिकाबाट अर्को आकार वा सामर्थ्यमा मापन हुन जान्छ । त्यसैले एउटै भूइँचालोको सामर्थ्य र आकारको अंक फरक फरक ठाउँमा फरक फरक देखिन सक्छ ।

भूकम्पको धक्कालाई जनाउन कसैले म्याग्निच्युड र कसैले रेक्टर स्केलको प्रयोग गर्छन । के यी दुवै एउटै हुन ? वा यी दुईमा केही तात्विक भिन्नता छन ? आउनुस् जानौं ।

वैज्ञानिकहरूले सन् १९३० को दशकमा धेरै संवेदनशील भूकम्पमापक यन्त्र (सिस्मोमिटर) विकास गरे जसले छिटो चल्ने कम्प्युटरहरूको सहायताले व्यापक भूकम्पीय संकेतहरूलाई रेकर्ड र व्याख्या गर्न सक्षम बनायो । त्यस समयमा रिच्टर (जसलाई रेक्टर स्केलका नामले पनि चिनिन्छ) मापन विधि विकास गरिएको थियो ।

रिच्टर वा रेक्टर स्केल नाम रहनुको पछाडि तत्कालीन वैज्ञानिक चार्ल्स एफ रिच्टरको योगदान रहेको छ । उनले सन् १९३५ मा भूकम्पको म्याग्निच्युड अर्थात् आकारका बारेमा पहिलोपल्ट कार्यपत्र प्रस्तुत गरेका थिए जसको नाम एन इन्स्ट्रुमेन्टल अर्थक्वेक म्याग्निच्युड स्केल थियो । यसै हिसाबले भूकम्पको आकार वा सामर्थ्यलाई रिच्टर स्केलमा मापन गर्न थालियो । उनको यो कार्यपत्र त्यस समयमा दक्षिणी क्यालिफोर्नियामा आएको भूकम्प मापनका आधारमा बनाइएको थियो ।

**यस्तो छ फरक**

आइरिश डट ईडीयूका अनुसार रिच्टर स्केलको मापन सामान्यतया म्याग्निच्युड ५ भन्दा ठूला नहुने क्षेत्रीय भूकम्पहरूको लागि प्रभावकारी हुन्छ जुन १ हजार किलोमिटरभन्दा नजिकबाट आएका हुन्छन् ।

उता मोमेन्ट म्याग्निच्युड भने ठूला भूकम्पहरूको लागि बढी प्रभावकारी हुन्छ । मोमेन्ट म्याग्निच्युडले ऊर्जा गणना गर्न धेरै तथ्याङ्कहरू (सिस्मिक मोमेन्ट) प्रयोग गर्छ । सिस्मिक मोमेन्टले सिस्मिक ऊर्जा, फल्ट लाइनको सरुवा, र चट्टानको कडा पनलाई संयोजन गर्छ ।

म्याग्निच्युड भन्ने शब्द चार्ल्स एफ रिच्टरलाई एच ओ वुडले इन्टेन्सिटी स्केलभन्दा फरक हुने हिसाबले सुझाएका थिए । यो शब्दले अलग अलग ठाउँमा राखिएको सिस्मोमिटरले महसुस गरेको कम्पनको मात्रा र आकलन गरिएको क्षतिको आधारमा भूकम्पको अतिपनालाई वर्गीकरण गर्छ ।

**सिस्मोमिटरले यो सिद्धान्तमा काम गर्छ**

सिस्मोमिटर इनर्शियाको सिद्धान्तमा आधारित उपकरण हो जसले भूकम्पीय तरंग वा कम्पन मापन गर्छ । यसले पेन्डुलम घडी जस्तो काम गर्छ । यसमा भारी वजन भएको वस्तु (जसलाई इनर्शियायुक्त वस्तु भनिन्छ) स्प्रिङको सहायताले फ्रेममा झुन्ड्याइन्छ । जब जमिन भूकम्पका कारण हल्लिन्छ, फ्रेम पनि सँगै हल्लिन्छ । तर, भारी वजन भएको वस्तु इनर्शसियाका कारण स्थिर रहन्छ ।

जमिनको हल्लाइ र इनर्शियायुक्त वस्तुको स्थिरताको बीचको सापेक्ष गति सिस्मोमिटरले रेकर्ड गर्छ । यो गति विद्युतीय संकेतमा रूपान्तरण गरिन्छ, जसलाई भूकम्पीय तरंगको परिमाण, आवृत्ति, र अन्य विशेषता पत्ता लगाउन प्रयोग गरिन्छ ।

## आन्तरिक....

विमर्श गर्यौं । नयाँ सहयात्रा अघि बढाउने निष्कर्षमा पुग्यौं ।

यस्ता अनेक तर्क गर्दै विपक्षी माओवादी केन्द्र, रास्वपा र राप्रपामाथि प्रहार गरिएको प्रतिवेदनमा एमालेबाट विभाजित भएर बनेको नेकपा एकीकृत समाजवादीबारे भने कुनै चर्चा गरिएको छैन । साथै, राजनीतिक दलहरूको प्रवृत्ति चर्चा गर्ने, प्रधान शत्रु किटान गर्ने र नेपाली काङ्ग्रेसलाई 'पुँजीवादी दल' करार गर्ने परम्परा समेत यसपटकको प्रतिवेदनमा पालना गरिएको छैन ।

ओलीद्वारा प्रस्तुत प्रतिवेदनको 'स्प्रिट' हेर्दा एमाले अहिले मूलतः ७ वटा कुराबाट त्रसित रहेको सहजै बुझ्न सकिन्छ । यद्यपि अध्यक्ष ओलीको प्रतिवेदनले यी भयलाई अस्वीकार गर्न र त्यसको प्रभावबाट पार्टीको प्रतिरक्षा गर्न खोजेको छ ।

तर, यसबीच एमाले मनोविज्ञानमा विकसित भएका डर के-के रहेछन् ? एमाले पङ्क्ति यसबारे कसरी सोच्दो रहेछ ? त्यो भने प्रतिवेदनमा प्रष्टै झल्किएको छ ।

एमाले प्रतिवेदनमा देशका चर्चित र ठूला भ्रष्टाचारका काण्डको छानबिन हुँदा आफ्नै पार्टीका नेताहरू पर्नसक्ने वा ' फसाइन सक्ने' भय देखिन्छ । प्रतिवेदनको महत्वपूर्ण अंश यही भयको चरित्र र प्रतिवादमा केन्द्रित छ ।

प्रतिवेदनमा - आफूहरूले ठूल्ठूला भ्रष्टाचारका फाइल खोल्न थालेपछी आत्तिएका दलहरू रातारात मिल्न पुगेको' भन्ने ' भाष्य भ्रामक र मिथ्या' हो । यो 'अभिव्यक्ति नै दुराशययुक्त' छ ।

प्रतिवेदनले शहरिया र युवा मतदाता पार्टीबाट टाढिँदै गएको र मतदान रुझान परिवर्तन हुँदै गएको सन्दर्भ एमालेका लागि चुनौतीपूर्ण हुने भय समेत व्यक्त गरेको छ । यसबारे प्रतिवेदनमा - कीर्तिपुर जस्तो ठाउँमा अपेक्षित परिणाम हासिल नहुनु र शहरिया जनमतमा आकर्षण बढ्न नसक्नुलाई गम्भीरतापूर्वक लिनु पर्दछ । शहरिया मतदातामाझ नेकपा एमालेले अझै धेरै मेहनत गर्नु पर्ने शिक्षा यस उपनिर्वाचनबाट प्राप्त भएको छ ।

सामाजिक सञ्जालले औपचारिक मूलधारका मिडियालाई प्रतिस्थापन गरेपछि पार्टीका चुनौती बढेको भय एमाले प्रतिवेदनमा प्रष्टै चित्रण गरिएको छ । सामाजिक सञ्जाल, कृत्रिम बौद्धिकताको युगमा भ्रामक प्रचार र डीपफेक फैलिएको भन्दै चिन्ता व्यक्त गरिएको छ । यसबाट अराजक र भ्रामक सूचना फैलिएको र त्यसले पार्टीलाई हानी पुर्‍याएको एमालेको ठहर छ ।

यसबारे प्रतिवेदन भन्छ - मिथ्या र भ्रामक प्रचार आज सिङ्गो समाजका लागि चुनौती बनिरहेको छ । यसले सामाजिक सद्भाव खल्बल्याउने, नागरिकहरूमा निराशा र विभाजन पैदा गर्ने एवं ठूलो मानसिक समस्या 'स्ट्रेस' सृजना गर्ने काम गरिरहेको छ । मिथ्या प्रचारमार्फत राज्यका निकाय, राजनीतिक दल र तिनको नेतृत्व, सुरक्षा संवेदनशीलता र अर्थतन्त्रमाथि नै प्रहार गर्ने क्रम बढेको छ ।

यसलाई एमालेले स्वाभाविक नभएर प्रायोजित मानेको छ । प्रतिवेदन भन्छ - हाम्रो पार्टीको लागि यो झनै ठूलो चुनौती बनेको छ । निराधार र कपोलकल्पित आरोप लगाउने, नेताहरूको चरित्र हत्या गर्ने र जनतामा भ्रम एवं निराशा फैलाउने यो अभियान केही नेताविरुद्ध लक्षित र केही व्यक्तिहरूको लहडमा मात्र सञ्चालित छैन, राष्ट्रिय राजनीतिमा एमालेको जुन स्थान, हैसियत र भूमिका छ, यसलाई कमजोर पार्न सुनियोजित उद्देश्यमा केन्द्रित छ ।

एमालेलाई अन्य कम्युनिष्ट घटक मुख्यत माओवादी केन्द्र आफूभन्दा ठूलो दल हुनसक्ने भय पनि पनि उत्तिकै देखिन्छ । विशेषतः सम्पन्न स्थानीय उपनिर्वाचनमा देखा परेको यस्तो मतदान प्रवृत्तिसँग एमाले चिन्तित देखिन्छ । यसबारे प्रतिवेदन भन्छ - उपनिर्वाचन परिणामलाई लिएर नेकपा माओवादी केन्द्रले एउटा भ्रामक सन्देश सम्प्रेषण गर्ने प्रयास गरिरहेको छ । आफ्नो दल पहिलो भएको र लोकप्रिय मत ह्वात्तै बढेको आदि । माओवादी केन्द्रले ८ बाट बढाएर ११ स्थानमा विजय हासिल गरेको सत्य हो । तर, हिजो ६ दलीय गठबन्धनका बेला आफूले उम्मेदवार नै नउठाएको र त्यसै कारण शून्य मत भएको ठाउँमा अहिले प्राप्त मत जोड्दा मात्र उसको बढेको देखिएको हो ।

साथै, 'रिक्त ४४ पदमा कुल २ लाख २६ हजार ७९९ मतदाताले मतदान गरेको चुनावले राजनीतिक शक्ति सन्तुलन र भविष्यको निर्वाचनको ठूलो पूर्वानुमान नगर्ने ठहर' गर्दै एमालेले चित्त बुझाएको छ ।

देशमा आम निराशा फैलिएको र त्यसबाट जनविद्रोह भड्किन सक्ने सम्भावनाबारे पनि एमाले चिन्तित देखिन्छ । प्रतिवेदन भन्छ - समाजमा चरम नैराश्यता देखा पर्न थाल्यो, राजनीतिक अस्थिरता गहिरिँदै जाँदा यसले जनतामा नैराश्य वृद्धि गर्ने' देख्यौं ।

एमालेको बुझाइमा अहिले 'अराजकता र अस्थिरताका सम्वाहकहरूलाई एक ठाउँमा उभ्याउने र अराजकताको परीक्षण गर्न विभिन्न शक्तिकेन्द्रहरू प्रयत्नशील छन् ।' तसर्थ नेपालमा बङ्गलादेशजस्तो जनविद्रोह भड्किन सक्ने अभिव्यक्ति ' गैरराजनीतिक अशोभनीय टिप्पणी' हो ।

बितेका ३५ वर्षमा देशको अपेक्षित आर्थिक विकास हुन नसकेको भने स्वीकार गर्दै एमालेले त्यसैलाई आधार बनाएर नागरिकमा निराशा फैलाइएको निष्कर्ष निकालेको छ ।

यसबारे प्रतिवेदन भन्छ - आन्दोलनमा नेतृत्व दिन सफल कतिपय दल र नेताहरू सुशासन र समृद्धिको मामिलामा चुकेको इन्कार गर्न सकिँदैन । सूचना प्रविधिको सहज उपलब्धताका कारण संसारका विकसित समाज र त्यहाँको जनजीवनसँग तुलना गरेर नेपालमा केही भएन भन्ने निराशा बढाउने स्थिति पनि पैदा भएको छ ।

यसो हुनुमा काङ्ग्रेस-एमालेलाई जिम्मेवार नदेखाएर दोष जति सबै माओवादी जनयुद्धको १ दशक, शान्ति स्थापनामा लागेको अर्को एक दशक, भूकम्प र नाकाबन्दीलाई लगाइएको छ ।

प्रतिवेदन भन्छ - प्रजातन्त्रकालमा हामीले भोग्नु परेका यी अवरोधलाई बिर्सेर नेपालको विकास किन सुस्त भयो भन्ने कारणलाई सही ढङ्गले बुझ्न सकिँदैन । आम निराशाबारे अन्ततः एमाले यस्तो निष्कर्षमा पुग्दछ - योजनाबद्ध ढङ्गले निराशाको खेती गर्ने' प्रवृत्तिको विरोध गर्दछौं ।

एमालेले गत आम निर्वाचन लगत्तै पार्टीलाई देशको एकल नेतृत्व गर्न सक्ने निर्णायक राष्ट्रिय शक्ति बनाउन मिसन-२०८४ को नारा दिएको सन्दर्भमा अहिलेसम्मका लक्षणले यो हासिल नहुने भय देखिएको छ ।

यसबारे प्रतिवेदन भन्छ - निर्णायक राष्ट्रिय शक्ति निर्माणको अनिवार्य पूर्वशर्त बलियो नेकपा एमाले हो । तर, मिसन-२०८४ को समय साँघुरिदै गए, राजनीतिक ध्रुवीकरण र मतदान प्रवृत्ति अझै एमाले अनुकूल नभएको, नेपाली काङ्ग्रेस उत्तिकै ठूलो प्रतिस्पर्धी दलका रुपमा कायमै रहने, नयाँ र वैकल्पिक खोज्ने प्रवृत्ति कमजोर नभएको सन्दर्भमा यही तरिकाले आगामी निर्वाचनमा निर्णायक राष्ट्रिय शक्ति बन्न मुस्किल पर्ने भयले एमालेलाई सताएको देखिन्छ । यसका लागि उसले थप कार्यभार तय गरेको छ ।

एमाले प्रतिवेदनमा देशले भूराजनीतिक शक्ति सन्तुलन हासिल गर्न हम्मेहम्मे पर्दै गएको भयसमेत व्यक्त भएको छ । भनिएको छ - अस्थिरता बढ्दै जाने र मुख्य राजनीतिक शक्तिहरू विभाजित अवस्थामा रहने स्थितिले राष्ट्रिय मनोबललाई कमजोर तुल्याउने, भूराजनीतिक प्रतिस्पर्धाको चुनौतीपूर्ण अवस्थामा राष्ट्रिय हितको रक्षा झनै कठिन हुने, नेपालको अहित चाहनेहरूलाई झनै सजिलो हुने यथार्थलाई पनि हामीले अनुभूत गरेका छौं ।

## माघे....

श्रेष्ठ बताउँछन् । बर्सेनि ठूलो सङ्ख्यामा मानिसहरू तोखामा चाकु उत्पादनसम्बन्धी तालिमका लागि आउने गरेका छन् । तोखामा चाकु बनाउने तालिम लिएर देशका विभिन्न स्थानमा गएर उद्योग सञ्चालन गरी काम गर्ने गरेको तोखा परम्परागत चाकु संरक्षण समाजले जनाएको छ ।

हाल नेपालभर ५० भन्दा बढी चाकु उद्योग छन् । जसमध्ये १४ वटा तोखामा छन् । तोखामा इस्वी संवत् ५१९ देखि चाकु बनाउने प्रचलन चलेको किंवदन्ती पाइन्छ । लामो समयदेखि चाकु बनाउँदै आएको तोखाको परम्परागत चाकु उद्योगलाई बचाउनका लागि विस २०७३ कात्तिक २२ गते तोखा परम्परागत चाकु संरक्षण समाज स्थापना गरिएको थियो ।

तोखामा ५० वर्षदेखि चाकु उत्पादन गर्दै आएका राजकाजी श्रेष्ठ तोखाको चाकु नेपाल मात्र नभई विश्वका विभिन्न मुलुकबाट माग भइरहेको बताउँछन् । चाकुको माग अत्यधिक भएपछि बजारसम्म पुर्याउन भ्याइनभ्याइ भएको उनको भनाइ छ । तोखाका उद्योगमा हाल सादा चाकु मसला चाकु, स्पेशल चाकु, सेतो लड्डु, कालो लड्डु, बम्बे लड्डु, पुष्टकारी, भुजा लड्डु, बदाम लड्डुलगायत उत्पादन भइरहेका छन् ।

काठमाडौं क्षेत्र नम्बर ५ का सांसद एवं स्वास्थ्य तथा जनसङ्ख्यामन्त्री प्रदीप पौडेल टोखाको चाकुलाई गुणस्तरीय रूपमा उत्पादन गरेर अन्तर्राष्ट्रिय बजारससम्म लैजानका लागि आफूले उद्योग मन्त्रालयलाई ध्यानाकर्षण गरिरहेको बताउँछन् । 'टोखा चाकुका लागि प्रख्यात क्षेत्र हो, यहाँ राज्यबाटै चाकु उत्पादनको पहल गर्नसके हजारौं व्यक्तिले रोजगारी पाउने छन्, त्यसका लागि मैले सम्बन्धित क्षेत्रमा पहल गरिरहेको छु', मन्त्री पौडेल भन्छन् । मन्त्री पौडेल टोखाको चाकुलाई नेपालको चक्लेट भनेर अन्तर्राष्ट्रियस्तरमा प्रचारप्रसार गर्न सकिने बताउँछन् । टोखामा उत्पादन भएको चाकु अहिले प्रतिकिलो एक सय ३५ देखि एक सय ४० सम्म बिक्री वितरण हुँदै आएको छ । नेवारी संस्कृतिमा माघ १ गते चाकु खानैपर्ने प्रचलन छ ।

नेवार समुदायमा काजरियाको बेलामा पनि चाकु खाने चलन छ । चाकु चिसो लागेका बेला पनि खाने गरिन्छ । चाकु खाँदा शरीरमा धेरै फाइदा हुनाका साथै रोगसँग लड्नसक्ने क्षमता विकास हुने र बालबालिकादेखि बूढाबूढीलाई जाडो महिनामा चाकु खुवाउँदा राम्रो हुने मान्यता छ ।

## स्थानीय....

सभ्यताहरुलाई संरक्षण गर्नेतर्फ पनि प्राधिकरणले विशेष ध्यान पुर्‍याउनुपर्ने बताए ।

कार्यक्रममा भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले अव्यवस्थित र जथाभावी निजी प्लानिङलाई स्वीकृति दिएका कारण काठमाडौं उपत्यकाका वातावरण नराम्रोसँग बिग्रिसकेको बताउँदै उनले जथाभावी प्लानिङ गर्दा वर्षाको समयमा खोलामा पानीभन्दा बढी माटो बग्ने गरेको बताए । उपत्यका विकास प्राधिकरणले अव्यवस्थित प्लानिङलाई नियन्त्रण गर्नेतर्फ ध्यान दिनुपर्ने बताउँदै देशको सबभन्दा बढी सरकारी जग्गा भएको जिल्ला दाङ भएको बताउँदै देशको सन्तुलित विकासको लागि संघीय राजधानी पश्चिम नेपालको दाङमा सार्नु उचित विकल्प हुने धारणा राखे । प्रमुख प्रजापतिले स्थानीय तहहरुलाई स–साना आवास योजनाहरु सञ्चालन गर्न नेपाल सरकारले आर्थिक र प्राविधिक सहयोग गर्नु आवश्यक भएको बताउँदै भक्तपुर नपाले १ हजार ६५३ रोपनी जग्गामा देको मिवा इतापाके आवास योजना सञ्चालन गरिरहेको बताए । सरकारमा जाने दलहरुमा १०० वर्षपछिको नेपाल कस्तो बनाउने भन्नेबारे कसैले सोच वा दृष्टिकोण बनाउन नसक्दा देश झन् झन् पछाडि पर्दै गएको बताउँदै प्रमुख प्रजापतिले अव्यवस्थित शहरीकरण, फोहोरमैला नदीमा बिसर्जन गर्नु, नदी नजिक शहर हरुको विकास र नदी किनारामा अतिक्रमण उपत्यकाका नदी फोहोर हुनुका मुख्य कारणहरु रहेको बताए । गुरुयोजना निर्माण गर्दै गर्दा उपत्यकाका लिच्छविकालीन र मल्लकालीन सम्पदाहरुको संरक्षणतर्फ पनि ध्यान पुर्‍याउनुपर्ने भन्दै उनले जनप्रतिनिधिहरुकै निर्देशनमा आयोजनाहरु सञ्चालन गरिनुपर्ने र सक्षम नभएका पालिकाहरुलाई सक्षम बनाउने काम संघ सरकारले गर्नु उचित हुने बताए । बागमती प्रदेश भौतिक विकासमन्त्री अमनकुमार मास्केले गुरुयोजना कार्यान्वयन गर्न अब ढिलाइ गर्न नहुने भन्दै संघ प्रदेश र स्थानीय तहबीच समन्वय आवश्यक भएको बताए । ललितपुर महानगरपालिकाका प्रमुख चिरिबाबु महर्जनले काठमाडौं उपत्यकाको गुरुयोजना धेरै पटक बनिसकेको भए पनि त्यसको कार्यान्वयन प्रभावकारी रुपमा हुन नसकेको बताउँदै गुरुयोजना निर्माणमा स्थानीय तहका जनप्रतिनिधिहरुलाई सहभागी गराउनुपर्ने बताए । उपत्यका विकास गर्ने सन्दर्भमा कुनै पनि अध्ययनले यहाँका सम्पदाहरुमा हस्तक्षेप गर्नु हुँदैन भन्दै उनले पाँच वर्षमा उपत्यकमा देखिने गरी यातायात व्यवस्थापन हुनुपर्नेमा जोड दिए । कार्यक्रममा राष्ट्रिय योजना आयोगका उपाध्यक्ष डा. शिवराज अधिकारीले भक्तपुरको आवास योजनाबारे आफूले अध्ययन अनुसन्धान गरेको बताउँदै भौतिक विकास मात्र विकास नभई गुणस्तरीय जीवनको पनि सुनिश्चितता गर्नुपर्छ भने । कार्यक्रममा नेपाल जग्गा तथा आवास विकास महासंघका अध्यक्ष विष्णु धमला, शहरी विकास मन्त्रालयका सचिव गोपाल प्रसाद सिग्देल, राष्ट्रिय योजना आयोगका सदस्य डा. रामेशप्रसाद सिंहले पनि आफ्नो धारणा राखेको थियो । काठमाडौं उपत्यका विकास प्राधिकारणका विकास आयुक्त जानुका ढकालको सभापतित्वमा सम्पन्न उक्त कार्यक्रममा प्राधिकरणका नायब विकास आयुक्त नवराज प्याकरेलले कार्यक्रमको उद्देश्यबारे जानकारी गराएको थियो भने शहरी विकास विज्ञ किशोरकुमार थापाले उपत्यकाको दीर्घकालीन सोच एवम् भौतिक विकास गुरुयोजनाको औचित्यसम्बन्धी प्रकाश पारेको थियो । साथै परामर्शदाता डा. विजयकृष्ण श्रेष्ठले गुरुयोजनाबारे प्रस्तुतीकरण देखाएको थियो । कार्यक्रममा उपत्यकाका प्रमुख, उपप्रमुख, गाउँपालिका अध्यक्षहरुको उपस्थिति रहेको थियो ।

## तिब्बतमा .

भूकम्पबाट भएको भौतिक क्षतिबारे अहिलेसम्म विस्तृत विवरण नआइसकेको चिनियाँ सञ्चारमाध्यमले जनाएका छन् ।

चीनको राज्य परिषद्को भूकम्प राहत विभाग र आपतकालीन व्यवस्थापन विभागले मङ्गलबार सियाङ स्वायत्त क्षेत्रको सिगात्से सहरमा गएको भूकम्पपछि तीन तहको आपतकालीन उद्धार प्रक्रिया सक्रिय गराइएको जनाएको छ ।

यसैबीच चिनियाँ राष्ट्रपति सी चिनफिङले तिब्बतमा मंगलबार बिहान गएको शक्तिशाली भूकम्पपछि राहत र उद्धारमा सबै शक्ति लगाउन निर्देशन दिएका छन् ।

चिनियाँ समाचार एजेन्सी सिन्ह्वाका अनुसार राष्ट्रपति सीले मंगलबार मध्यान्ह बेइजिङ र तिब्बतस्थित सरकारी अधिकारीहरूलाई निर्देशन दिँदै राहत र उद्धारमा सबै शक्ति केन्द्रित गर्न भनेका हुन् ।

भूकम्पपछि विश्वको सर्वोच्च शिखर सगरमाथा क्षेत्र चीनले अस्थायी रुपमा बन्द गरेको छ। चीन सरकारले तिब्बती मोहडातर्फको क्षेत्रबाट पर्यटकहरूलाई प्रवेशमा रोक लगाउँदै अस्थायी रुपमा बन्द गरेको सीजीटीएनले जनाएको छ। चीनमा सगरमाथालाई छ्मोलोङ्मा भन्ने गरिन्छ ।

## आदिवासी....

महासन्धी, १९९२ प्रमूख रहेका छन् । यी अन्तराष्ट्रिय संयन्त्रहरु नेपालले अनुमोदन र पक्ष राष्ट्रका रुपमा मतदान गरेको छ । यस बाहेक विश्व व्यापी संयुक्त राष्ट्रसंघीय घोषणा पत्र र नागरिक तथा राजनीतिक अधिकारको अन्तराष्ट्रिय अनुवन्ध (१९६६) ले प्रत्याभूत गरेको मानव अधिकारलाई आदिवासीको आधारभूत अधिकारलाई सम्बोधन गरेको छ ।

आदिवासी जनजातिको सञ्चार अधिकार

आदिवासी जनजातिको अधिकार सम्बन्धी संयुक्त राष्ट्र संघीय घोषणा पत्र, २००७ ले आदिवासीको सञ्चार अधिकारको व्यबस्था गरेको छ । घोषपत्रको धारा १६(१) अनुसार आदिवासी जनजातिलाई उनीहरुकै भाषामा आफनै सञ्चारमाध्यम स्थापना गर्ने विशेष अधिकार दिएको छ । यो अधिकार अन्तर्गत रहेर आदिवासी संस्थाले सामुहिक रुपमा सञ्चार स्थापना गर्न स्वतन्त्र हुने छन् । अहिलेको सञ्चार सम्बन्धी कानूनहरुले राष्ट्रिय, प्रादेशिक र स्थानीइ सञ्चार माध्यमका रुपमा बिभाजन गरेकोमा थप आदिवासी सञ्चारका रुपमा बर्गिकरण गर्नू पर्ने अवस्था छ ।

नेपाल पक्ष भएको आदिवासी अधिकार सम्बन्धी संयुक्त राष्ट्र संघीय घोषणा पत्रले कुनै भेदभावविना सबै प्रकारका गैह्रआदिवासी सञ्चारमाध्यममा पहुँच प्राप्त गर्ने अधिकारलाई स्थापित गरेको छ भने घोषणा पत्रको धारा १६ (२) मा राज्यहरुले सरकारी सञ्चार माध्यममा उचित मात्रामा आदिवासीको साँस्कृतिक विविधता विविधता प्रतिविम्बित होस भन्ने कुराको सुनिश्चितता गर्न प्रभावकारी उपाय गर्ने छन् । भन्ने उल्लख छ । यसरी नै राज्यहरुले अभिव्यक्तिको पूर्ण स्वतन्त्रता सुनिश्चिततम गर्ने कुरालाई प्रतिकुल असर नपार्ने गरी आदिवासी साँस्कृतिक विविधतालाई पर्याप्त मात्रामा प्रतिविम्बित गर्न निजी स्वामित्वमा रहेका सञ्चारमाध्यमलाई प्रोत्साहन गर्नू पर्छ भनेर लेखिएको छ ।

विश्वव्यापी मान्यता अनुसार आदिवासी सञ्चार संस्थाको बेगल परिभाषा उपलब्ध छ । यो परिभाषा अनुसार (क) आफनै भाषामा वा लक्षीत समुदायले बुझ्ने भाषामा समाचार तथा कार्यक्रम सन्चालन गर्ने (ख) सँस्कृति सुँहाउँदो सूचना दिने (ग) यसको व्यबस्थापन, नियन्त्रण र स्वामित्व आदिवासीकै हुनु पर्ने (घ) आदिवासीकै स्रोत र साधन प्रयोग स्थापना गरेको हुनु पर्ने र (ङ) स्वतन्त्र, गहन चासो राख्ने समूह लगायतका आँकाक्षीहरुको चाख, रुचि अनुसार चलेको हुन पर्ने लगायतका विशेषता भएको हुनु पर्दछ । यस बिशेषता अनुसार नेपालमा केही आदिवासी मिडियाहरु स्थापित छन् ।

उदाहरणका लागि इन्डिजिनियस कम्युनिटि रेडियो नेटवर्कमा आवद्ध २४ वटा रेडियोहरुलाई केही हद्सम्म आदिवासी मिडियाको रुपमा परिभाषा गर्न सकिन्छ । यस नेटवर्कमा २४ रेडियो आवद्ध छन् । आवद्ध हुने रेडियोहरुमा रेडियो त्रियुगा, सामुदायिक रेडियो उदयपुर, आफनो एफएम, नेवा एफएम, रेडियो नमबुद्ध, गोर्खाली रेडियो, रुपाकोट, मेन्छयायम, कालिन्चोक, सुम्हालुङ, गुर्वावा, जनसन्चार भक्तपुर, भोजपुर, चोमोलुङ्मा, रसुवा, कैरन, लिखु, जलजला, मर्स्याङदी, खाँदबारी, मितफ समाद, जुगल र रेडियो सोलु रहेका छन् ।

टेलिभिजन तर्फ इन्डिजिनियस टेलिभिजन एक मात्र आदिवासी केन्द्रीत सामुदायिक टेलिभिजन हो । यसरी नै नेवा टेलिभिजन, काष्टमण्डप र बोधी टेलिभिजन लगायतका आदिवासीका अगुवाइमा सन्चार संस्थाहरु खुलेका छन् ।

नेपालको सञ्चार संस्थामा आदिवासी केन्दीत छापा माध्यम पनि प्रसस्तै खुलेका छन् । आदिवासी छापा माध्यमलाई बिषयबस्तु केन्दव्त र भाषामा आधारित सञ्चार गरी दुई भागमा बिभाजन गर्न सकिन्छ । भाषगत आधारमा नेवारी भाषा सबै भन्दा अग्रणी छ भने त्यस पछि थारु भाषाका माध्यमका पत्रपत्रिका धेरै छन् । सूचना तथा प्रसारण विभागका अनुसार हालसम्म नेवारी भाषामा पत्रिका प्रकाशन गर्ने गरी ४६ पत्रिका दर्ता छन् ।

थारु भाषामा १४, तामाङ भाषामा १० र अन्य भाषा लगायत बहुभाषिक चरित्रका ३१६ पत्रिका सूचना विभागको अभिलेखमा पाइन्छ । राई वान्तवा, चाम्लिङ, वाम्वुले भाषामा पत्रिका प्रकासित भईरहेका छन् । लिम्बू भाषामा पनि पत्रिका प्रकासित छ । यसरी नेपालका आदिवासी मिडियाले नेपालको बहुभाषिक मुलुकको छविलाई प्रस्तुत गरिरहेका छन् । तर समस्याका रुपमा आदिवासी सन्चार संस्था खुल्छन्, अनि आफै बिलाउँछन् । यो भने समस्याका रुपमा देखिएको छ ।

इन्डिजिनियसबाट

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# ‘एक जोर जुत्ता’को कथामा लघुचलचित्र निर्माण

काठमाडौं । माध्यमिक तहको कक्षा ८ को नेपाली विषयको पाठ्यक्रममा समावेश ‘एक जोर जुत्ता’ कथामा लघुचलचित्र निर्माण भएको छ । ‘एक जोर जुत्ता’ कथाका लेखक महेश विक्रम शाह रहेका छन् । आफु विदेश यात्रामा रहँदा भएको यथार्थ घटनामा आधारित भएर लेखिएको कथा ‘एक जोर जुत्ता’ कथामा चलचित्र निर्माण हुँदा शाहले खुशी व्यक्त गरे । उनले लेखेको कृति ‘छापामारको छोरो’ ले मदन पुरस्कारसमेत प्राप्त गरेको थियो ।

लघुचलचित्र ‘एक जोर जुत्ता’ मा श्रमिका लुइँटेल, सुरज पराजुली, रामबाबु रेग्मी, गीताश्री थापा, समिरा थापा, सितास्मा खड्का, सहदेव बस्नेत र राजु कारंजितको अभिनय रहेको छ । ऐना आर्टसको प्रस्तुतिमा निर्माण भएको लघुचलचित्रलाई नारायण जिसीले छायांकन गरेका हुन् । कला निर्देशन सुमित राई र निर्माण व्यवस्थापन कविर शाक्यले गरेका छन् । छायांकनअघि मुन क्रियशन फिल्म एकेडेमीमा कार्यशाला गरिएको लघुचलचित्रलाई अनिल कुमार महर्जनले रंग संयोजन तथा सम्पादन गरेका हुन् ।

लघुचलचित्रको निर्माणसँगै कास्टिङ डिरेक्सन रंगकर्मी सुरेन्द्र क्षेत्रीले गरेका हुन् । बालबालिकाको क्षेत्रमा लामो समयदेखि कार्यरत क्षेत्री काठमाडौंका विभिन्न स्कूलहरुमा पनि नाटक प्रशिक्षण गर्दै आईरहेका छन् । अहिले विद्यालयहरुमा पढाउने तरिका नै परिवर्तन भईरहेको अवस्थामा विद्यार्थीहरुका लागि कथा बुझ्न अझ सहज होस् भन्ने हेतुले लघुचलचित्र निर्माण गरिएको निर्माता क्षेत्री बताउँछन् । उनले निर्माण गरेको लघुचलचित्र ‘द स्कुल वाल’ले रसियामा उत्कृष्ट अवार्डसमेत प्राप्त गरेको थियो ।

लघुचलचित्र ‘एक जोर जुत्ता’ को पटकथा तथा निर्देशन मोहन अभिलाषीले गरेका छन् । उनको लेखन तथा निर्देशनमा निर्माण भएको लघुचलचित्र ‘भाउ’, ‘घुर्रा’, ‘ पाउलो’, ‘द स्कूल वाल’ ले विभिन्न अन्तराष्ट्रिय चलचित्र महोत्सवहरुमा छनोट भएर अवार्डसमेत प्राप्त गरेको थियो । पछिल्लो समय उनले लघुचलचित्र ‘दृश्य’ निर्माण गरेसँगै ठूलो पर्दाको चलचित्र निर्माणको तयारीमा लागेका छन् ।

# मध्यपुरका गायक आश्रय नेवा आइडलको फाइनलमा

भक्तपुर । मध्यपुर थिमिका युवा गायक आश्रय रञ्जित ‘नेवाः आइडल सिजन २’ को फाइनलमा प्रवेश गरेको छ । आश्रयसँगैं सुजितमान शाक्य, हाना महर्जन, रत्नमान महर्जन, अशेष महर्जन, अनिल सयामी र अनिशराज श्रेष्ठ पनि सांगीतिक रियालिटी शो ‘नेवाः आइडल २’ को फाइनलमा प्रवेश गरेको छ ।

फिजिकल तथा डिजिटल अडिसनमार्फत सहभागी ५० जनामध्ये विभिन्न चरणबाट छनोट हुँदै आएका ७ जनाबीच फाइनलमा प्रतिस्पर्धा हुन लागेको हो । फाइनल माघ ५ गते हुने छ । ठमेलस्थित नेपा सा जिए ए हलमा दिउँसो २ बजेदेखि फाइनल शुरू हुने आयोजक फाल्कन इभेन्टले जनाएको छ ।

आइडलको मुख्य निर्णायकमा गोबिन्द ह्युमत र संगिता शाक्य थापा छन् । आइडलको निर्देशन अन्जीता खड्गीले गरेको छ । आयोजक फाल्कन इभेन्टका कार्यकारी अध्यक्ष मनोज नेवाः खड्गीका अनुसार ५० प्रतिशत निर्णायकको मतको आधारमा र ५० प्रतिशत दर्शकको भोटिङका आधारमा विजेता छनोट गरिने छ । विजेताले ट्रफीसहित नगद १ लाख २५ हजार रूपैयाँ प्राप्त गर्नेछन् । दोस्रोले ५० हजार पाउँदा तेस्रोले २५ हजार प्राप्त गर्नेछन् । त्यस्तै चौथो र पाँचौंले १०/१० हजार प्राप्त गर्नेछन् ।

नेवाः आइडल पहिलो सिजनको विजेता मन्जिल शाक्य घोषित भएका थिए । नेपाल भाषाको संगीत अन्तर्राष्ट्रिय स्तरसम्म पुर्याउन सकिन्छ भन्ने उद्देश्य लिएर आइडल आयोजकको भनाइ छ । साथै लुकिरहेका प्रतिभालाई प्रोत्साहन गर्ने, सांगीतिक क्षेत्रमा नेवाः मौलिकता प्रस्तुत गर्ने, गैर नेवाःहरूलाई पनि नेवाः संगीत र नेपाल भाषामा आकर्षित गर्ने लगायतका उद्देश्य रहेको आयोजकले जनाएको छ ।

यसैबीच ‘नेवाः आइडल सिजन २’ को भोटिङ शुरु भएको छ । आइडल विजेता ५० प्रतिशत दर्शकको भोटिङका आधारमा पनि हुने भएकाले भोटिङ खुल्ला गरिएको आयोजकले जनाएको छ । फाइनल प्रवेश गरेका आश्रयाको भोटिङ कोड एनआई ००४ रहेको छ । आश्रयले यस अघि पनि विभिन्न प्रतियोगितामा उत्कृष्ट प्रदर्शन गरिसकेको छ । उनले चर्चित भारतीय गायन रियालिटी शो ‘सुर श्री’ को पाँचौं संस्कारको सेमिफाइनलसम्मको यात्रा तय गरेको थियो ।

# “लाज शरणम्”को पोस्टर सार्वजनिक

काठमाडौं । चलचित्र ‘ लाज शरणम्’को पोस्टरले यो सिनेमाप्रतिको अपेक्षा बढाइदिएको छ । कमेडी र कथा एकसाथ देखिएको पोस्टरले सिनेमाप्रतिको अपेक्षा बढाइदिएको हो । चलचित्रको मख्य प्रचार सामग्रीमध्यको एक हो पोस्टर । पोस्टरको राम्रो डिजाइन भयो भने त्यसले चलचित्रको कथा भन्दै दर्शकमा कौतुहलता बढादिन्छ । यो काम ‘लाज शरणम्’को पोस्टरले गर्यो ।

पोस्टर राम्रो हुंदा र दर्शकले त्यसलाई मन पराइदिँदा सिनेमा नै प्रतिक्षित बन्छ । दर्शक सिनेमा रिलिजको पर्खाइमा हुन्छन् । यो सफलता पनि ‘लाज शरणम्’ले पायो । पोस्टर, टिजर र ट्रेलर सिनेमाको सारांश हुन् । ‘लाज शरणम्’को टिजर र ट्रेलर त आउन बाँकी नै छ । तर पोस्टरले भने सिनेमाको हाइप बढाउने काम गरे । निर्माणपक्षले एकसाथ सार्वजनिक गरेका तीनवटै पोस्टरको दर्शकले तारिफ गर्दा सिनेमाको पर्खाइमा दर्शक रह्यो । पोस्टरले दिएको सफलता टिजर र ट्रेलरले जोगाउन सक्छ कि सक्दैन त्यो भने हेर्न बाँकी छ ।

‘लाज शरणम्’को टिमले तीनवटा पोस्टर सार्वजनिक गरेको थियो । पोस्टरका कथा र कमेडी एक साथ देखिएको थियो । गम्भीर विषयलाई रमाइलो तरिकाले ‘लाज शरणम्’ले कथा भन्ने पोस्टरले संकेत गरेको थियो । तर, प्रष्ट रूपमा कथा के हो खुलाएको छैन ।

सार्वजनिक गरिएका पोस्टरमा चलचित्र अधिकांश मुख्य कलाकार अटाएका छन् । पोस्टरमा पाँच जना कलाकार फिचर्ड छन् । चार जना चिनिए पनि एक जना चिनिँदैन ।

पहिलो पोस्टरमा कफिनभित्र हरिस निरौला (क्रकोज), विजय बराल, सागर लम्साल (बले) र अर्जुन घिमिरे (पाँडे) छन् । कफिनभित्रबाट उनीहरूले केही आश्चर्य र रमाइलो मिश्रित भावमा केही हेरिरहेका छन् । यसलाई मृत्युपछि मान्छेले के देख्छ होला भन्ने परिकल्पनाका रूपमा बुझ्न सकिन्छ ।

दोस्रो पोस्टरमा हात तराजु बोकेर एक व्यक्ति कफिनमाथि उभिएका छन् । उसको तराजुमा यार्सा र सुनको बिष्कुट जोखिरहेको देखिन्छ । सुनको विष्कुट यार्साको भन्दा भारी तौल देखाइएको छ ।

उसको अगाडि हिमाल र त्यसको काखमा बस्ती छ । यो पोस्टरले सम्पत्तिको लोभ र बाध्यतामा मान्छे कसरी मृत्युसम्म पुगिरहेको छ भन्ने बुझ्न सकिन्छ ।

अर्को पोस्टरमा हरिष र विजय छन् । हरिषको ढाडमा बसेर विजयले मान्छेको हड्डीको शंख फुकिरहेको देखिन्छ । यसले प्रतिशोध साँधिरहेको देखाएको छ । सँगै विजय पनि सिनेमामा हाबी हुने एक पात्र हुन् भन्ने देखाउँछ ।

पोस्टरले अभाव, आम नेपालीको बाध्यता, मृत्युपछि पनि त्यसमा देख्ने पैसा देख्ने नेपाली र आफ्नै हिमाली बस्ती होस् वा परदेश नेपालीले मृत्युसँग साक्षात्कार गरिरहेको यथार्थलाई पोस्टरले देखाइदिएको छ । वर्षकै प्रतिक्षितमध्येको एक यो चलचित्र ‘लाज शरणम्’ महाशिवरात्रिको अवसर पारेर फागुन १४ गतेबाट प्रदर्शन हुँदैछ । यो चलचित्रलाई कुमार कट्टेल (जिग्री ब्रो’ले निर्देशन गरेका छन् ।

चलचित्रमा मुकुन्द श्रेष्ठ, विजय बराल, महेश त्रिपाठी, अर्पण थापा, रेणु योगी, विजय लामा, माला लिम्बुसँगै सक्किगोनि टिमबाट अर्जुन घिमिरे (पाँडे), सागर लम्साल (बले), हरिष निरौला (कक्रोज), प्रियाना आचार्य (मुन्नी), बबिन राई (गल्फने बाजे), रामभजन कामत, कमलमणि नेपाल (खुपीका बाउ) लगायत कलाकारको अभिनय छ । सिनेमालाई सुदीप बरालले छायांकन गरिरहेका छन् ।

जेपिटी क्रियसनको ब्यानरमा निर्माण भएको सिनेमामा अधिकांश ‘सक्किगोनि’ टिमका कलाकार नै रहने छन् । सिनेमामा नवीन श्रेष्ठ निर्माता, राम नरेश शाह र सृजना खड्का सह-निर्माताको रूपमा रहेका छन् । ‘लाज शरणम्’को विदेश प्रदर्शन अधिकार बिक्री भइसकेको छ । सिनेमाको विदेश प्रदर्शन अधिकार सेभेन सिज इन्टर नेसनलले किनेको छ ।

वितरण कम्पनीका प्याट्रिक सुवेदीका अनुसार ‘लाज शरणम्’लाई दुई चरणमा विभाजित गरी अन्तर ाष्ट्रिय बजारमा वितरण गर्ने योजना छ । सुवेदीले ‘लाज शरणम्’ आगामी फेब्रुअरी २८ र मार्च ७ तारिखमा विभिन्न देशहरूमा प्रदर्शन गरिने जानकारी दिएका छन् । कुन-कुन देशमा प्रदर्शन हुने भन्ने विस्तृत जानकारी भने चाँडै सार्वजनिक गरिने सुवेदीले बताएका छन् । नेपालमा भने सिनेमालाई ब्यांकटेस इन्टरटेनमेन्टले वितरण गर्नेछ ।

# “स्वीट एण्ड सावर विथ सज्जु” को पहिलो संस्करण समाप्त

काठमाडौं । नेवाः टिभीबाट प्रसारित लोकप्रिय कार्यक्रम “स्वीट एण्ड सावर विथ सज्जु” को पहिलो संस्करण समाप्त भएको छ । समाजमा रहेका प्रतिष्ठित, ख्यातिप्राप्त एवं सांगीतिक क्षेत्रका व्यक्तिहरुसँग अन्तरङ्ग गर्न कार्यक्रमको पहिलो संस्कर कीर्तिपुरस्थित जोशी ननी हेरिटेजमा एक सांगीतिक तथा मायाको चिनो प्रदान गरी सम्पन्न भएको छ ।

कार्यक्रम कीर्तिपुर नगरपालिकाका मेयर कृष्णमान डंगालेको मुख्य आतिथ्य तथा नेवाः टिभीका अध्यक्ष नविन जोशीको सभापतित्वमा सम्पन्न भएको थियो । करिब दुई वर्षसम्म नियमित संचालन भएको कार्यक्रमका प्रस्तोता सज्जु मानन्धरले आफ्नो कार्यक्रमलाई सबै दर्शकहरुले धेरै भन्दा धेरै मनपराइदिएकोले नै विभिन्न आरोह अवरोहका बाबजुद पनि निरन्तर प्रशारण गर्न सफल भएको बताए ।

उनले आफ्नो कार्यक्रमको पहिलो संस्करण सफल पार्न सहयोग पुऱ्याउनु हुने सबैलाई कृतज्ञता व्यक्त गरे । समापन कार्यक्रममा मुख्य अतिथि मेयर डंगोलले सम्वाद कार्यक्रममा आएर अन्तर्वार्ता दिने अतिथिहरुलाई मायाका चिनो प्रदान गरेको थियो । साथै आफू पनि संगीतप्रेमी भएको भन्दै एउटा सुमधुर गीत प्रस्तुत गरेको थियो ।

सांगीतिक माहोलमा भएको कार्यक्रममा सुरजकुमार मानन्धर, गौतम दास मानन्धर, देवेन्द्र ताम्राकार, सोनी राजभण्डारी, विवेक तामाङ, राजेश श्रेष्ठ, सुमज शाक्य जस्ता गायक गायिकाहरुले आफ्नो सुमधुर स्वरले दर्शकहरुलाई मनोरन्जन गरेका थिए । कार्यक्रममा संगीत क्षेत्रका हस्तीहरु पवन जोशी, दिप तुलाधर, जुगल डंगोल, राजु सिंहका साथै साहित्यकार स्नेह सायमी, संचारकर्मी तथा निर्देशक रामकृष्ण खड्गी तथा विभिन्न क्षेत्रका व्यक्तित्वहरुको उपस्थिति रहेको थियो । कार्यक्रममा स्वागत मन्तव्य च्याट सोका प्रोडुसर डा. राजु मानन्धरले राखेका थिए भने कार्यक्रमको संचालन गायिका सविना मानन्धरले गरेका थिए ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY




वर्ष १८ अङ्क २५ ने.सं. ११४५ सिल्लागा षष्ठी फागुन ०७ गते बुधबार, २०८१ 19 Feb. 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## अध्यादेश पारित गरी छाड्ने रणनीतिमा सरकार !



काठमाडौं । दुई ठूला दल नेकपा एमाले र नेपाली कांग्रेसका साथ दुई साना मधेशवादी दलहरुको गठवन्धनबाट एमाले अध्यक्ष केपी शर्मा ओलीको नेतृत्वमा सरकार बनेको केहीं समय पछि नै हिउँदे अधिवेशन छलेर सरकारले छ वटा अध्यादेश ल्याएको थियो । सरकारले संसद अधिवेशन सुरु हुनुअघि ल्याएका अध्यादेशको चौतर्फी बिरोध हुन थालेपछि सरकारले अधिवेशन बोलाएको थियो । देशको कानुन अनुसार अधिवेशन शुरु भएपछि सरकारले कुनै पनि अध्यादेश जारी गर्न नसक्ने भएको हुँदा अहिले सरकारले ल्याएको अध्यादेश जारी संसदको अधिवेशनबाट पारित गर्नु पर्ने हुन्छ । तर सरकारलाई समर्थन गरेको दुई साना दलहरुले यथास्थितिमा विधयेक पारित गर्न नदिने अडानमा छ भने प्रतिपक्ष शुरु देखि नै अध्यादेशको विपक्षमा रहेका थिए । अहिले ५ वटा अध्यादेश संसदको दुवै सदनमा पेस गर्ने सत्ता साझेदार दलबीच सहमति जुटेको छ । एउटा भूमिसम्बन्धी अध्यादेशमा भने सरकार राष्ट्रियसभामा अल्पमतमा पर्ने देखिएको छ ।

हिउँदे अधिवेशन गत माघ १८ बाट शुरु भएको छ । हिउँदे अधिवेशनलाई मुलतः विधयेक अधिवेशनको रुपमा लिइन्छ । जेठ महिनामा शुरु हुने अधिवेशनलाई आर्थिक तथा सरकारको नीति तथा कार्यक्रमको राण्नीति तयार पारिने अधिवेशनको रुपमा लिइन्छ भने हिउँदको अधिवेशनलाई विधयेक अबिधेशनको रुपमा लिइने परिपाटी रहेको छ । तर सरकार भने प्रतिनिधि सभाबाट विधयेक पारित गराउनुको सातो मन्त्री परिषद्को निर्णय भन्दै राष्ट्रपति मार्फत अध्यादेश जारी गर्दै सरकार संचालन गर्ने मनस्थिति रहेको देखिन्छ । विगतमा पनि केपी शर्मा ओलीकै नेतृत्वमा बामपन्थीहरुको दुई तिहाई बहुमतको सरकार भएको समयमासमेत अध्यादेश मार्फत एमाले कै विद्यादेवी भण्डारी राष्ट्रपति भएको फाइदा उठाउँदै अध्यादेश जारी गर्दै सरकार चलाउने प्रयास गरेको थियो भने अहिले राष्ट्रपतिमा नेपाली कांग्रेसका रामचन्द्र पौडेल रहेको छन् भने सरकारको नेतृत्व अवको एक वर्ष पछि सभापति देउवाले पाउनृ पक्का जस्तो बनेको अवस्थामा कांग्रेसको लागि एमाले अध्यक्ष ओलीलाई साथ दिनुको विकल्प देखिदैन । सरकारले संसदमा अध्यादेशहरु प्रस्तुत गरिसकेको छ । जसमा नेपाली कांग्रेसको देउवा पक्ष सकारात्मक देखिएको छ भने कांग्रेसकै केही नेताहरु भने भूमिसम्बन्धी अध्यादेशबाहेक अन्य ५ वटा अध्यादेशमा सहमत देखिएका छन् । तर नेपाली कांग्रेसका अन्य नेताहरु सभापति शेर बहादुर देउवाको विपक्षमा जानै स्थिति भने देखिएको छैन । यसमा नेकपा एमालेको लागि अन्य दलहरुलाई मिलाउन भने सकस देखिएको छ । नेकपा एमाले पक्ष जसरी पनि अध्यादेश संसदबाट पारित गरेर लागू गर्ने पक्षमा देखिन्छ ।

तर, अन्य पाँच अध्यादेश पनि सरकारले आइतबार र सोमबार बसेको प्रतिनिधिसभा र राष्ट्रियसभा बैठकमा पेस गर्न सकेको छैन । कारण उपेन्द्र यादवको जनता समाजवादी पार्टी नेपाल, महन्त ठाकुरको लोकतान्त्रिक समाजवादी पार्टी र सिके राउतको जनमत पार्टीले सहयोग गर्छ भनेर ठोकुवा गरेको देखिँदैन । सरकार भने ६ वटै अध्यादेश एकैपटक पारित गर्ने बाटो खोजिरहेको छ ।

फागुन ३ गते भूमिसम्बन्धी अध्यादेशबारे छलफल गर्न

बाँकी पेज ७ मा

## कांग्रेस–एमालेको शासनकालमा बेथिति र भ्रष्टाचारले सीमा नाघिसक्यो !




काठमाडौं । नेपाल संघीय समाजवादी पार्टीका अध्यक्ष एवं पूर्वगृह राज्यमन्त्री मो.रिजवान अन्सारीले उत्पीडित जनताका लागि नयाँ राजनीतिक शक्ति निर्माण गर्नुपर्ने बाध्यात्मक अवस्था आइसकेको बताएका छन् ।

रौतहट जिल्लाको कनकपुरमा क्षेत्र नं. ३ को क्षेत्रीय भेलामा सम्बोधन गर्दै अध्यक्ष अन्सारीले नेपाली जनताले कांग्रेस र एमालेहरूको शासन ५० वर्षदेखि भोग्दै आएको र ५० वर्षमा यिनीहरूको शासनमा मुलुकले बेरोजगारी भ्रष्टाचार असमानता बेथिति अन्याय र अत्याचार भोगिरहेको जिकिर गरेका छन् ।

'नेपाली जनताको सपना दिगो शान्ति समानता समाजिक

बाँकी पेज ७ मा

## कार्यसम्पादन मूल्यांकनमा मध्यपुर थिमि पहिलो स्थानमा




भक्तपुर । कार्यसम्पादन मूल्यांकनको आधारमा भक्तपुरका ४ स्थानीय तहमध्ये मध्यपुर थिमि नगरपालिका सर्वोत्कृष्ट सावित भएको छ । यस वर्ष स्थानीय तहको संस्थागत क्षमता स्वमूल्यांकन (लिजा)मा दोश्रो भएको यो नगरपालिका कार्यसम्पादन मूल्यांकनमा भने पहिलो बन्न पुगेको हो ।

राष्ट्रिय प्राकृतिक श्रोत तथा बित्त आयोगले सार्वजनिक गरेको परिणाम अनुसार मध्यपुर थिमि नगरपालिकाले १०० पूर्णाङ्कमा ७०.७ अङ्क प्राप्त गर्दै जिल्ला प्रथम भएको प्रेस संयोजक जगत प्रजापतिले

बाँकी पेज ७ मा

## नगरकोट भ्रमण वर्ष सफल पार्ने उपत्यका मेयर्स फोरमको निर्णय




भक्तपुर – भक्तपुरकोपर्यटकीयक्षेत्रनगरकोटमा सोमबार सम्पन्न उपत्यका मेयर्स फोरमको ११औं बैठकले आगामी वैशाख १ गतेदेखि चाँगुनारायण नगरपालिकाले आयोजना गर्न लागेको 'नगरकोट भ्रमण वर्ष' सफल पार्ने निर्णय गरेको छ ।

चाँगुनारायण नगरपालिकाको आयोजनामा नगरकोटमा सम्पन्न उपत्यका मेयर्स फोरमको बैठकमा सहभागी बागमती प्रदेशका मुख्यमन्त्री, प्रदेश मन्त्रीहरू, नगर प्रमुखहरू, उपप्रमुखहरूलगायत जनप्रतिनिधिहरूको बैठकले तीनै तहका सरकारले भ्रमण वर्ष सफल पार्न सहयोग गर्नुपर्नेमा जोड दिएका हुन् ।

बागमती प्रदेशका मुख्यमन्त्री बहादुरसिंह लामाले नगरकोट भ्रमण वर्ष सफल बनाउन प्रदेश सरकारबाट आवश्यक सहयोग गर्ने प्रतिबद्धता जनाए । उपत्यका मेयर्स फोरमसँग सहकार्य गर्दै अगाडि बढ्न तयार रहेको भन्दै उनले त्यसका लागि नियमित छलफल आवश्यक रहेकामा जोड दिए ।

प्रदेशका आर्थिक मामिला तथा योजनामन्त्री कुन्दनराज काफ्लेले स्थानीय तह र प्रदेश सरकारबीच सहकार्य भए धेरै क्षेत्रमा अगाडि बढ्न सकिने औँल्याए। उनले सहकार्य र समन्वयका आधारमा भ्रमण वर्ष सफल बनाउनुपर्नेमा जोड दिए ।

प्रदेशका आन्तरिक मामिला तथा कानुनमन्त्री सुरजचन्द्र लामिछानेले पर्यटकीय नगरी नगरकोटको पर्यटन प्रवर्द्धन गर्ने उद्देश्यले गर्न लागिएको नगरकोट भ्रमण वर्ष सफल पार्न प्रदेश सरकारको सहयोग रहने बताए । उनले पर्यद्धन प्रवर्द्धनका माध्यमबाट नागरिकको जीवनस्तर सुधार गर्नुका साथै समृद्ध मुलुक निर्माणमा सहयोग पुग्ने विश्वास व्यक्त गरे ।

काठमाडौं उपत्यकामा सञ्चालित सवारीसाधनको धुवाँ प्रदूषण परीक्षण प्रविधि कार्यान्वयनमा ल्याउने, उपत्यकाका अस्पाललजन्य फोहरमैला व्यवस्थापन गर्नेलगायत निर्णय बैठकले गरेको छ ।

प्रदेश सरकार र स्थानीय तहबीच वित्तीय हस्तान्तरण, राजस्व बाँडफाट र अन्तरतह समन्वयसम्बन्धी विषयमा छलफल गर्नुका साथै स्थानीय तह, प्रदेश सरकार र सङ्घीय सरकारबीचको आपसी सहकार्य, समन्वय गर्दै अगाडि बढ्नेबारे सहमति भएको थियो ।

चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्रीले पर्यटकीय क्षेत्र नगरकोटलाई मेयर्स फोरमका माध्यमबाट चिनाउने अवसर पाएको चर्चा गर्दै समग्र

बाँकी पेज ७ मा

## नुन र मुटु रोगको सम्बन्ध

● डा. राजेन्द्र कोज

काठमाडौं । नुन हाम्रो भान्छाको एक अपरिहार्य वस्तु हो । हामीले बिहानको नास्तादेखि खाना, दिउँसोको खाजा र साँझको खानामा नुनको प्रयोग गरेकै हुन्छौं । अझ भनौं नुन हाम्रो जिब्रोको स्वाद हो, जसको अभावमा हामीले खाने भोजन स्वादिष्ट हुँदैन । नुनको अभावमा शरीरमा आलस्यता आउने मात्र होइन, स्वास्थ्यमा अनेक समस्या हुने गर्दछ ।

नुन हाम्रो संस्कृतिसँग पनि जोडिएको छ । जुठो बार्दा नुन नखाने, कतिपय पूजाआजामा अनिवार्य प्रयोग गरिन्छ । यसरी हाम्रो शरीरका लागि अपरिहार्य नुन किन फेरि हानिकारक छ त भन्ने प्रश्न पनि उठ्ने गर्दछ । ठिक्क हुँदा ठीक, बेसी हुँदा हानिकारक हुने भएकाले नुनको प्रयोगमा ध्यान दिनुपर्छ । दैनिक कति नुन हाम्रो शरीरका लागि आवश्यक हो त भन्ने कुरा व्यक्तिको जीवनशैली, ठाउँ र स्वास्थ्य अवस्थाले पनि केही फरक पार्न सक्छ । सामान्यतः दैनिक दुईदेखि तीन ग्रामसम्म नुन (सोडियम) सेवन गर्नु उपयुक्त हुन्छ । बढीमा पाँच ग्राममा सीमित रहनेगरी खान सकिने भन्ने विश्व स्वास्थ्य सङ्गठन (डब्लुएचओ) ले पनि भनेको छ ।

मुटुसँगको सम्बन्ध

नेपालमा नुन सेवन र मुटु रोगको सम्बन्ध गम्भीर चिन्ताको विषय बनेको छ । आयोडिनयुक्त नुनले थाइराइड जस्ता रोग नियन्त्रण गर्न सहयोग पुऱ्याए पनि यसको अत्यधिक सेवनले मुटु रोगलाई निम्त्याउन सक्छ । यहाँका मानिसको जीवनशैली, खानपान र स्वास्थ्य शिक्षाको अभावका कारण नुनको अत्यधिक सेवन र यसको कारणले हुने मुटु रोगका समस्या बढ्दो क्रममा छन् । हाम्रो स्वास्थ्यका लागि दुईदेखि तीन ग्राम उपयुक्त हुन्छ तर अधिकांश नेपालीले दैनिक पाँच ग्रामभन्दा धेरै नुन सेवन गर्ने गर्छन् । विशेषगरी अचार, तिख्खर खानेकुरा, तथा प्रशोधित खानेकुराहरू जस्तै, लेज, कुरकुरे, चाउचाउ आदिमा उच्च मात्रामा नुन हुन्छ । ग्रामीण क्षेत्रमा प्राकृतिक खानाको प्रयोग भए पनि, सहरी क्षेत्रमा प्रशोधित खाना र फास्ट फुडको लोकप्रियताले नुन सेवनको दर उच्च देखिएको छ ।

नुन र मुटुरोग बीचको सम्बन्ध धेरै अध्ययनहरूद्वारा पुष्टि भएको छ । नुनमा सोडियमको मात्रा धेरै हुन्छ । अत्यधिक सोडियमले शरीरमा पानी थुप्रिने (पानी धारण गर्ने) समस्या उत्पन्न गराउँछ, जसले गर्दा रक्तचाप बढ्छ । रक्तचापले मुटु र रक्तनलीहरूको स्वास्थ्यमा प्रतिकूल प्रभाव पार्न सक्छ । उच्च रक्तचाप (हाइपरटेन्सन) मुटु रोगको प्रमुख जोखिम कारक हो । नेपालमा हृदय रोग मृत्युको प्रमुख कारणमध्ये एक

बाँकी पेज ७ मा

# सांसदको दश प्रश्नमा प्रम ओलीको जवाफ

काठमाडौं । प्रधानमन्त्री केपी शर्मा ओलीसँग सांसदहरुले आज प्रत्यक्ष प्रश्न गरेका छन् । आज बसेको प्रतिनिधि सभा बैठकमा १० सांसदका प्रश्नको प्रधानमन्त्री ओलीले जवाफ दिएका छन् ।

सांसदको प्रश्न र प्रधानमन्त्री ओलीले जवाफ जस्ताको तस्तै :

प्रश्न नं. १

प्रश्नकर्ता मा. प्रकाश ज्वाला

प्रश्नको व्यहोरा

सम्माननीय सभामुखज्यू,

प्रधानमन्त्रीसँग प्रश्नोत्तर कार्यक्रममा सम्माननीय प्रधानमन्त्रीज्यूसँग निम्न प्रश्नहरू सोध्न चाहन्छु:-

(१) तपाइले तामझामका साथ शिलान्यास गरेका १६५ निर्वाचन क्षेत्रीय रणनीतिक सडकहरू बजेटको अभावमा अलपत्र र अधुरा छन् भने पालिका अस्पतालहरू कतिका जगमात्र बसेका छन्, कतिका पिलरमात्र अस्थिपञ्जरजस्तै उभिएका छन्।रणनीतिक सडकहरू र पालिका अस्पतालहरूको लागि बजेटको व्यवस्था गरेर काम सम्पन्न गर्ने योजना के छ ?

(२) प्रधानमन्त्रीज्यू तपाईंले सिद्धबाबा सुरुङमार्गको ब्रेक थ्रु हुनुलाई सरकारको सबैभन्दा ठूलो उपलब्धिको रुपमा लिनु भयो। तर अघिल्लो सरकारको बेलामा ब्रेक थ्रु भएको नागढुङ्गा सुरुङ मार्ग सञ्चालनमा ल्याउन सरकार किन उदासिन छ? राप्ती लोकमार्ग र कर्णाली राजमार्ग अत्यन्त जीर्ण भई जनताले निकै सास्ती व्यहोरिरहेकाले उक्त योजनाहरूको लागि पर्याप्त बजेट व्यवस्था गरी स्तरोन्नति गर्नका लागि सरकारसँग के योजना छ ?

(३) भूकम्प प्रभावित जाजरकोट, रुकुम पश्चिम, सल्यान लगायतका जिल्लाहरूमा भुकम्प पीडितहरूले अस्थायी आवासको लागि पाउनु पर्ने दोश्रो किस्ताको रकमसमेत पाउन सकेका छैनन्। भुकम्प पीडितको पूर्नस्थापना र क्षतिग्रस्त संरचनाको पुर्ननिर्माणको काम त शुरु पनि भएको छैन। छाप्रोमा बस्न विवस बाढी पहिरो पीडित र भुकम्प प्रभावित क्षेत्रका जनताका समस्या कहिले समाधान गर्नुहुन्छ ?

(४) सहकारी पीडित, चर्को ब्याजबाट पीडित, लघु वित्त पीडित, मिटर ब्याज पीडित, गुठी पीडित मोही किसान, आफ्नो उत्पादनको उचित मूल्य नपाएका उखु किसान, भुक्तानी नपाएका दुध किसान, महंगीको मारमा परेका आम जनसमुदायलाई सरकारले कहिले दिन्छ न्याय र राहत?

प्रश्न नं. १ को जवाफ

माननीयज्यूले उठाउनुभएको प्रश्नको लागि धन्यवाद।

(१) मेरो अघिल्लो कार्यकालमा मैले निर्वाचन क्षेत्र रणनीतिक सडक र हरेक पालिकामा आधारभूत अस्पतालहरूको आवश्यकता महसुस गरी सो को निर्माणको सुरुवात गरेको थिएँ। तर त्यसको केही समयपछि नै सरकार परिवर्तन भयो र म बाहिरिएँ। त्यसपछि आउने सरकारहरूले ती कार्यक्रमहरू रद्द गरे। निर्माण रोकियो। प्रश्नकर्ता माननीय पनि त्यसपछिका सरकारमा भौतिक पूर्वाधार मन्त्री हुनुहुन्थ्यो कि जस्तो लाग्छ। कार्यक्रमहरू रद्द गर्नेले नै फेरि त्यसको प्रगति खोज्ने हामीमा अनौठो संस्कार छ।

उपरोक्त सबै सडक र अस्पतालहरूको निर्माण सम्पन्न गर्न ठूलो बजेटको आवश्यकता पर्छ। ती अस्पतालहरू केही संख्यामा निर्माण सम्पन्न भएका छन्। उपलब्ध स्रोत र साधनलाई ध्यान दिई बाँकी सडक र अस्पतालहरू प्राथमिकता पूर्वक निर्माण भइरहेका छन्। हामी फेरि सरकारमा आएको ६ महिना पुग्यो।

सरकारले स्वास्थ्य क्षेत्रलाई उच्च प्राथमिकता दिएको छ। स्थानीय तहमा ५/१०/१५ बेडका अस्पतालहरू निर्माणाधीन छन्। अस्पतालको पूर्वाधार निर्माण र जनशक्ति व्यवस्थापनका लागि उपलब्ध स्रोत र साधनको प्राथमिकताकासाथ विनियोजन गरिरहेको र आगामी बर्ष पनि प्राथमिकतापूर्वक विनियोजन गरिने छ।

नेपालभर रहेका हरेक निर्वाचन क्षेत्रहरूमा तुलानात्मक रुपमा घना बस्ती भएका स्थानहरू एवम् स्थानीय प्राथमिकतामा परेका रुट हुँदै जाने भएकाले निर्वाचन क्षेत्र रणनीतिक सडक कार्यक्रम प्रभावकारी सावित भएको छ। हालसम्म यसको प्रगति करिव ५८ % रहेको छ भने अधिकांश सडकहरू यस आर्थिक वर्षमा नै सकिने भएकाले सरकारले उच्च प्राथमिकताकासाथ बजेट व्यबस्थापन गर्ने विश्वास दिलाउन चाहन्छु।

(२) सरकारले खासगरी सडक पूर्वाधार विकासलाई महत्व दिई सोही अनुरूप बजेट विनियोजन गर्ने गरेको छ। माननीयज्यूले उठान गर्नुभएको सिद्धबाबा सुरुङमार्गको ब्रेक थ्रु हुनु खुशीको कुरा हो। उक्त सुरुङमार्ग २०८३ चैत्रमा सक्ने लक्ष्य रहेतापनि हालसम्म कुल ४३ प्रतिशत सहित १ हजार १ सय २६ मिटर मुख्य सुरुङ खन्ने कार्य सम्पन्न भएको छ भने यसको सञ्चालन तथा व्यवस्थापन समेत निर्माण व्यवसायीबाट हुनेगरी व्यवस्था मिलाइएको छ।

त्यसैगरी, नागढुङ्गा सुरुङ मार्गका सम्बन्धमा कुरा गर्दा उक्त सुरुङमार्ग २०८२ कार्तिकमा सक्ने लक्ष्य रहेकोमा हालसम्म ८५ प्रतिशत प्रगतिसहित अत्यावश्यक पर्ने ीष्निजतष्लन, ख्मलतर्षबितष्यल हरूको कार्य भैरहेकोले निर्माण कार्य सम्पन्न हुने चरणमा रहेको छ। यसैगरी राप्ती लोकमार्गमा ६० करोड बराबरको स्रोत सुनिश्चित गरी निर्माण कार्य अगाडी बढाइदै छ। कर्णाली राजमार्गको जीर्णखण्डहरूमा मर्मत कार्यहरू भैरहेको अवस्था छ।

(३) जाजरकोट भूकम्पबाट प्रभावित जिल्लाहरूमा हालसम्म ३ अर्ब ९५ करोड ६५ लाख रकम निकासा भैसकेको छ। रुकुम र जाजरकोट जिल्लामा जिल्ला विपद् व्यवस्थापन समितिबाट सिफारिस भै रितपूर्वक आएका सबै भूकम्प प्रभावितका लागि प्रथम र दोस्रो किस्ताको रकम पठाइसकिएको छ। २०८१ माघ महिनामा मात्रै भूकम्प प्रभावितहरूका लागि थप रु.८० करोड निकासा भएको छ। जाजरकोट भूकम्पको विस्तृत क्षति आँकलनका लागि इन्जिनियरहरूको पहिलो टोली यसै हप्ता देखि फिल्डमा खटिने छ।

मनसुनजन्य विपद् एवं भूकम्पबाट प्रभावितहरूको समस्या समाधानका लागि विपद् व्यवस्थापन राष्ट्रिय परिषद्को मिति २०८१ पौष २८ गते बसेको बैठकले रु. १ खर्ब १ अर्बको पुनर्निर्माण तथा पुनर्स्थापना योजना स्वीकृत गरी निजी आवास र भौतिक पूर्वाधार पुनर्निर्माणको लागि स्पष्ट मार्गचित्र तयार भएको छ। सो को प्राथमिकताको आधारमा कार्यान्वयन हुँदै जानेछ।

(४) सरकारले सहकारी क्षेत्रमा देखिएका समस्या समाधानका लागि नीतिगत, संस्थागत र व्यवस्थापकीय सुधारका कार्य गरिरहेको छ र पहिले देखिएका समस्याहरू विस्तारै समाधान उन्मुख रहेका छन्। सहकारी ठगीमा चालु आर्थिक वर्षमा मात्र नेपाल प्रहरीबाट रु. ५ अर्ब ११ करोड ठगी गरेको आरोपमा ४८ वटा मुद्दा दर्ता भैसकेका छन्। सरकारले सहकारी सम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्न बनेको अध्यादेश, २०८१ जारी गरेको छ। जुन यस क्षेत्रमा देखिएका समस्या समाधानका लागि कोशेढुङ्गा सावित हुनेछ। त्यसैगरी, बचत तथा ऋणको मुख्य कारोवार गर्ने सहकारीहरूको नियमनका लागि राष्ट्रिय सहकारी नियमन प्राधिकरणको गठन गरी कार्यसम्पादन भइरहेको छ।

यहाँले उठान गर्नुभएको अनुचित लेनदेन (मिटर ब्याज) पीडितलाई न्याय र राहत दिने सम्बन्धमा यस समस्याको अन्त्य गरी दीर्घकालीन समाधान गर्नका लागि जाँचबुझ गरी राय/सुझाव सहितको प्रतिवेदन पेश गर्न गठन भएको आयोगमा दर्ता भएकामध्ये ५ हजार २ सय उजुरी फर्छ्यौट भैसकेका छन्। यसैगरी, नेपाल प्रहरीका जिल्लास्थित कार्यालयमा प्राप्त उजुरीहरू छानबीन गरी टुंग्याउने कार्य भैरहेको छ।

माननीयज्यूले उठान गर्नुभएको उखु किसानले आफ्नो उत्पादनको उचित मूल्य नपाएको र दुग्ध किसानको बाँकी रकम भूक्तानी हुन नसकेको विषयमा सरकारको ध्यानाकर्षण भएको छ।

यसै सन्दर्भमा उखु किसानले आफ्नो उत्पादनको उचित मूल्य पाउन् भन्ने उद्देश्यले उखु क्रसिङ्ग हुनुपूर्व नै नेपाल सरकारले उखुको खरिद मूल्य तोक्ने गरेको छ। सरकारले निर्धारण गरेको खरिद मूल्यमा कृषकहरूबाट उखु खरिद गरी तुरुन्तै भुक्तानी दिन उखु मिलहरूलाई निर्देशन दिइएको छ। चालु आर्थिक वर्षका लागि मंसिर महिनामै उखुको खरिद मूल्य रु. ५ सय ८५ प्रति क्विन्टल तोकिएको छ। गत वर्ष आफूले उत्पादन गरेको उखुलाई मिलमा क्रसिङ्ग गराएका ८ जिल्लाका करिब ६५ हजार कृषकहरूलाई सम्बन्धित उखु मिलले दिने खरिद मूल्यका साथै नेपाल सरकारले रु. ७० प्रति क्विन्टलका दरले १ अर्ब ४४ करोड ९२ लाख रकम अनुदान प्रवाह गरेको छ।

दुग्ध किसानको भुक्तानी सम्बन्धमा दुग्ध विकास संस्थानले हालसम्म २ अर्ब ४ करोड रकम भुक्तानी दिइसकेको छ। दुग्ध विकास संस्थानलाई दूध विक्री गर्ने सबै कृषकहरूको भाद्र मसान्तसम्मको बाँकी रकम भुक्तानी भइसकेको छ भने बाँकी रकम पनि क्रमशः भुक्तानीको प्रक्रियाका लागि अघि बढाइएको छ। केही निजी डेरीहरूले कृषकहरूलाई भुक्तानी गर्न बाँकी रहेको दूध विक्री रकम यथाशिघ्र भुक्तानी गर्न निर्देशन दिइएको छ।

जनतालाई महङ्गीको मारबाट मुक्त गर्न नियमित रुपमा र चाडबाडको समयमा सघन रुपमा बजार अनुगमन गर्ने गरिएको छ। खाद्य व्यवस्था तथा व्यापार कम्पनी लिमिटेड र साल्ट ट्रेडिङ् लिमिटेड जस्ता सार्वजनिक संस्थानबाट चाडबाड लक्षित सुपथ मूल्य पसल देशका विभिन्न स्थानमा सञ्चालन गर्ने गरिएको छ।

कानून विपरीतका क्रियाकलाप कोही कसैले गरेमा प्रचलित कानून बमोजिम कारवाही गर्न सरकार प्रतिबद्ध छ।

प्रश्न नं. २

प्रश्नकर्ता मा. प्रतिक्षा तिवारी

प्रश्नको व्यहोरा

सम्माननीय सभामुख महोदय,

सम्माननीय सभामुख महोदय मार्फत सम्माननीय प्रधानमन्त्रीज्यूलाई प्रश्नः

प्रश्न नं. १

मधेश प्रदेशमा राष्ट्रिय गौरवका आयोजना (जस्तै जयनगर-जनकपुर-कुर्था रेलवे, काठमाडौं-तराई मधेश द्रुत मार्ग, निजगढ अन्तर्राष्ट्रिय विमानस्थल, सुनकोशी मरिन डाइभर्सन) आदि। हालका तथ्याङ्क अनुसार अपेक्षित बजेट र समय सीमाभित्र प्रगति नभएको देखिएको छ। यस सन्दर्भमा तपाईंले ती आयोजनामा देखिएको बजेट, ठेक्का व्यवस्थापन र प्रक्रियागत ढिलाइका चुनौतीहरूलाई समाधान गर्न कस्ता ठोस नीति बजेट विनियोजन र अनुगमन सुधारका उपायहरू अवलम्बन गर्ने सोच राख्नुभएको छ ? साथै मधेश प्रदेशको विकासलाई राष्ट्रिय गौरवको स्तरमा पुऱ्याउन नयाँ रणनीतिक पहलहरू के के हुन् ?

चुरे दोहनका कारण मधेश प्रदेशमा खानेपानीका मुहान सुक्नुका साथै वातावरण प्रदूषणको समस्या बढ्दो छ। जसकारण मानव जीवनमा गम्भीर समस्या पैदा भएको छ। यस्तै कोशीदेखि नारायणी नदीसम्म चुरेको काखमा कृत्रिम नहर निर्माण गरी चुरे तथा तराइ च्भअजबचनभ सिचाइ, खानेपानीको समस्या समाधान गर्न उपयुक्त हुने देखिन्छ। यस सन्दर्भमा चुरे दोहन अन्त्य गर्न नेपाल सरकारको योजना के छ ? अब सुख्खा मौसमसँगै वर्षा नहुञ्जेलसम्म खानेपानीका चापाकल, नदीनाला सुकी पानीको हाहाकार बढ्ने छ। खानेपानी व्यवस्थापनको लागि तत्कालिन र दीर्घकालीन ठोस योजना के छ ? जान्न चाहन्छु।

प्रश्न नं. २ को जवाफ

१. तराई मधेशमा रहेका एवं त्यहाँका नागरिक लाभान्वित हुने आयोजनाहरूलाई सरकारले सधैं प्राथमिकतामा राखेको छ। यी आयोजनाहरूले तराई-मधेश क्षेत्र मात्र नभएर समग्र देशको आर्थिक एवं सामाजिक विकासमा योगदान पुर्याउने भएकोले देशकै राष्ट्रिय गौरवका आयोजनाहरू हुन्। स्रोह्रौं योजनामा यी आयोजनालाई प्राथमिकताका साथ समाबेश गरिएको छ। आवधिक योजनाको लक्ष्य अनुरुप हरेक वर्ष नीति तथा कार्यक्रम एवं बजेटमा पनि यस्ता आयोजनामा उल्लेखनीय बजेट विनियोजन गरी आयोजना कार्यान्वयनमा संलग्न निकायहरूलाई क्रियाशिल बनाइएको छ।

जयनगर-जनकपुर-कुर्था-विजयपुरा ५२ किलोमिटर रेलवेको निर्माणकार्य सम्पन्न भई यात्रुबाहक रेलसेवा दैनिक संचालन भएको छ। जयनगर-जनकपुर हरेक दिन ३ पटक र जनकपुर-विजयपुरा दिनको १ पटक आउने-जाने गरी रेल सेवा दिइएको छ। थप विजयपुरा-बर्दिबास सम्मको १७ किलोमिटर खण्डमा भारतीय सरकारको सहयोगमा छिट्टै निर्माण प्रक्रिया अघि बढ्दैछ।

काठमाण्डौं-तराई मधेश द्रुत मार्गलाई शीघ्रताका साथ सम्पन्न गर्न नेपाली सेनालाई यसको जिम्मेवारी तोकिएको छ। यस आयोजना लाई छिटो सम्पन्न गर्ने सम्बन्धमा सम्बद्ध निकायका उच्च पदाधिकारीहरूसँग पटक पटक छलफल गरी तीव्रताका साथ कार्यान्वयन गरेको छु। यस आयोजनाको हालको भौतिक प्रगति ३७.६ प्रतिशत रहेको छ।

सुनकोशी मरिन डाईभर्सन बहुउद्देश्यीय आयोजनाको सुरुङ्गको निर्माण सम्पन्न भई हाल हेडवर्क्स र पावरहाउस लगायतका संरचना निर्माणको काम अघि बढेको छ। हाल यसको भौतिक प्रगति ३५.१८ प्रतिशत रहेको छ।

निजगढ अन्तर्राष्ट्रिय बिमानस्थलले ठूलो लगानीको माग गर्दछ। त्यस योजनाको लगानीको व्यवस्थापन गरी निर्माणकार्य अगाडि बढाउन सरकार सकारात्मक छ।

२. चुरेको भू-बनोट, माटोको प्रकृति, जैविक विविधतामा ह्रास र छोटो समयमा सघन वर्षा आदि कारणले यो क्षेत्र अति संवेदनशील छ। चुरे क्षेत्र र तराई मधेशमा देखिएको पानीको समस्या समाधानका लागि शुरुवाती चरणबाटै राष्ट्रपति चुरे संरक्षण कार्यक्रम मार्फत पानीका स्रोतको संरक्षणका विभिन्न कार्यक्रहरू सञ्चालन हुँदै आइरहेका छन्। हालसम्म ६ सय ५७ वटा भूमिगत जल पुनर्भरण, पोखरी निर्माण तथा संरक्षण, १ सय ५९ वटा तालतलैया तथा सिमसार व्यवस्थापन, १ सय ७६ वटा च्बष्ल धबतभच चगलयाा जबचखभकतष्लन मक, ७६ वटा जल पुनर्भरण एवं संरक्षण पोखरी निर्माण, ५ सय ४८ वटा पानी मुहान संरक्षण तथा कुवा उत्खनन् लगायतका कार्य सम्पन्न गरिएको छ। चुरेको संरक्षण गरी वातावरण संरक्षण, खानेपानीको आपूर्ति व्यवस्थापन जस्ता जनतासँग प्रत्यक्ष सम्बन्धित रहेका विषयमा सरकारले उच्च प्राथमिकता दिएको छ।

प्रश्न नं. ३

प्रश्नकर्ता मा. प्रतिमा गौतम

प्रश्नको व्यहोरा

प्रतिनिधि सभा नियमावली, २०७९ को नियम ५६ र ५८ बमोजिम सम्माननीय प्रधानमन्त्रीज्यूलाई देहायको प्रश्न सोध्न यो सूचना दिएको छु।

नेपालमा विकास निर्माणमा योजनाहरू समयमा सम्पन्न नहुने गम्भीर समस्या रहेको छ। एउटा आयोजना सम्पन्न हुन औषतमा करिब १५ वर्ष लाग्ने अवस्था रहेको तथ्यले देखाउँछ। जसका कारण राष्ट्रिय गौरवका ठूला आयोजना जस्तै सिक्टा सिंचाई आयोजना, बबई सिंचाई आयोजना राष्ट्रिय प्राथमिकता आयोजना र अत्यावश्यक परियोजनाहरू समेत दशकौंसम्म अधुरै रहेका छन्। झन ठूला आयोजनालाई बहुवर्षीय बनाउने र न्यून बजेट छुट्टयाएर होल्ड गर्न प्रवृत्तिले स्रोत सुनिश्चितता नहुनु र भुक्तानी प्रक्रियामा ढिलाइ हुनुले यस्ता परियोजनाहरू समयमै सम्पन्न नहुनुको प्रमुख कारण रहेका छन्। स्थिर र दीर्घकालीन वित्तीय व्यवस्थापनको अभावले निर्माण कार्य अत्यन्त सुस्त बनाउनुका साथै लागत अत्यधिक वृद्धि गरिरहेको छ। यसले निर्माण व्यवसायीहरूलाई वित्तीय संकटमा पार्नुका साथै सर्वसाधारणले तोकिएको समयमा सेवा उपयोग गर्न नपाउने अवस्था सिर्जना भएको छ भने लागत बढ्ने गरेको छ। जसले राष्ट्रिय विकासको गति अवरुद्ध गर्दै नेपालको आर्थिक वृद्धिमा समेत नकरात्मक प्रभाव पारिरहेको छ।

नेपालमा ठूला राष्ट्रिय परियोजनाहरू दशकसम्म अधुरै रहने समस्यालाई समाधान गर्न र आयोजना समयमा नै सम्पन्न गर्नको लागि सरकारले बजेट व्यवस्थापन स्रोत सुनिश्चितता र भुक्तानी प्रक्रियामा सुधार गर्न के कस्ता प्रयास गरिरहेको छ ? कानूनमा समस्या हो ? कार्यान्वयनमा हो ? नियममा हो ? वा नियतमा ? बहुवर्षीयको नाममा योजना बनाउने न्युन स्रोत छुट्टयाउने र प्रगति नहुने अवस्था कसरी रोक्न सकिन्छ ? यस्ता परियोजनाहरूलाई प्रभावकारी बन(ाउन र समयमै सक्न के कस्तो योजना सरकारको छ ? साथै, विगतमा देखिएको ढिलाइ गर्ने, काम सम्पन्न नगर्ने, नगराउने प्रवृत्तिलाई रोक्न सरकारले के कस्ता ठोस कदम चाल्दैछ ?

प्रश्न नं. ३ को जवाफ

माननीयज्यूले उठाउनु भएको सिक्टा सिंचाइ र बबई सिंचाइ आयोजना लगायतका राष्ट्रिय गौरव र राष्ट्रिय प्राथमिकताका ठूला आयोजनाहरू समयमा सम्पन्न गर्ने विषयमा म पनि गम्भिर र संवेदनशील छु। मेरो सरकार गठन भएपछि यी आयोजनाहरू समयमै सम्पन्न गर्न तथा निर्माण व्यवसायीको भुक्तानीको समस्या समाधान गर्न मैले सुरु देखि नै पहल गरिरहेको छु। आर्थिक वर्ष २०८०/८१ को अन्त्यमा भुक्तानी गर्न बाँकी रहेको दायित्वमध्ये हालसम्म रु. २२ अर्ब ४३ करोड ३६ लाख भुक्तानी भईसकेको छ।

यसै सन्दर्भमा ठूला राष्ट्रिय परियोजनाको लागि स्रोतको समस्या आउन नदिन सम्बन्धित मन्त्रालयलाई बजेट तर्जुमाको लागि प्रदान गरिएको बजेट सिलिङबाट त्यस्ता आयोजनाका लागि सो आर्थिक वर्षमा आवश्यक पर्ने रकम विनियोजन गरी इयरमार्क गरेपछि मात्र अन्य आयोजना तथा कार्यक्रममा बजेट छुट्ट्याउने गरी नीतिगत प्रबन्ध गरिएको छ।

नयाँ बहुवर्षीय आयोजनाका लागि स्रोत सुनिश्चित गर्दा विस्तृत आयोजना प्रतिवेदन वा विस्तृत इन्जिनियरिङ्ग डिजाइन स्वीकृत भएको, वातावरणीय मूल्याङ्कन सम्बन्धी परीक्षण सम्पन्न भएको, जग्गा प्राप्तिको प्रक्रिया टुङ्गिएको, साइट क्लियरेन्स भएको, मध्यमकालीन खर्च संरचनामा समावेश भएको तथा खरिद गुरुयोजना तथा कार्यान्वयन योजना स्वीकृत भएको आयोजनाको कार्यान्वयन आवश्यक र औचित्यपूर्ण देखिएमा स्रोतको उपलब्धताको आधारमा मात्र स्रोत सहमति दिने कानूनी व्यवस्था गरिएको छ।

राष्ट्रिय गौरवका आयोजना तथा

**बाँकी पेज ५ मा**

# संस्कृति पुनर्जीवित गर्दै बागलुङ बजारका स्थानीय



काठमाडौं । ऐतिहासिक हनुमान नाचले बागलुङ बजारको किनाराटोलमा मानिसहरू अबेर रातिसम्मै ठेलमठेल गर्दै रैथाने संस्कृतिको आनन्द बटुले । लौरो जुभ्काउँदै मृदङ्ग र भ्याालीको तालमा नाचिरहेका कलाकारले दर्शकदीर्घाको मन जिते । नाच अवलोकनका लागि गण्डकी प्रदेशका स्वास्थ्यमन्त्री कृष्णप्रसाद पाठकसहितका विशिष्ट व्यक्तिहरू पनि किनाराटोल आइपुगेका थिए । नौ वर्षको अन्तरालमा गत भदौ ११ मा सुरु भएको हनुमान नाच त्यसयता तेस्रोपटक विधिवत् रूपमा नचाइएको हो । भदौ ११ बागलुङ नगरपालिका-३ नारायणचोक, मङ्सिर १५ मा वडा नं २ लोकतान्त्रिकचोक र शनिबार वडा नं ३ किनाराटोलमा नाच निकालिएको हनुमान संरक्षण परिषद्का अध्यक्ष तीर्थप्रसाद श्रेष्ठले जानकारी दिए । यही फागुन १० गते राधाकृष्णटोलमा नाचको तयारी भइरहेको उनले बताए ।

नारायणचोकमा हनुमानको मूर्ति प्रतिस्थापन र पूजाविधि गरेपछि हनुमान नाच सुरु भएको थियो । सोही दिन भीमसेनको मन्दिरमा विशेष पूजाआजा गरी बोका बलि दिने परम्परासमेत रहिआएको छ । नारायणचोकमा मुख्य पूजाआजासहित नाच सुरु गरेपछि बजारका विभिन्न टोलटोलमा पुगेर उक्त नाच देखाउने चलन छ । 'टोल पूजाका रूपमा त्यो सञ्चालन हुन्छ, माग भए जिल्लाबाहिर पनि पुगेर नाच देखाउन सकिन्छ', हनुमान नाचका मूलकजी (व्यवस्थापक) ईश्वरप्रसाद मलेपतिले भने, 'टोल पूजा सकिएपछि यसपालिको हनुमान नाचलाई विधिवत् रूपमा विसर्जन गर्छौं ।' यसअघि विसं २०७२ र विसं २०६३ मा हनुमान नाच देखाइएको उनको भनाइ छ ।

मेला-महोत्सवमा झाँकीका रूपमा नाच प्रदर्शन गर्ने गरिए पनि विधिवत् रूपमा नाच निकाल्न भन लामो समय कुर्नुपर्ने अवस्था रहेको परिषद्ले जनाएको छ । हनुमान नाच खर्चिलो मानिन्छ । एकैपटक धेरै कलाकार र व्यवस्थापकहरू आवश्यक पर्ने हुँदा तयारीका लागि धेरै समय चाहिने मूलकजी मलेपतिले बताए । उनका अनुसार यसअघि काठमाडौं, भक्तपुर, पोखरा, भैरहवालगायतका ठाउँमा उक्त नाच प्रदर्शन गरिएको थियो । चैतको अन्तिम मङ्गलबार नाच समापन गर्ने पूर्वयोजना रहेपनि वैशाख-जेठसम्म नाच लम्बिने देखिएको उनको भनाइ छ ।

के हो ऐतिहासिक हनुमान नाच ?

भक्तपुरबाट सुरु भएता पनि हनुमान नाच बागलुङ, बेनीलगायत सीमित ठाउँमा मात्र संरक्षित रहेको संस्कृतिकर्मी प्रेम छोटाले बताए । तीन, पाँच, सात र नौ गरी बिजोर वर्ष पारेर नाच नचाउने परम्परा रहेको उनको भनाइ छ । पौराणिककालका वीर हनुमानको आराधानाले शक्ति प्राप्त हुनुका साथै सुख, समृद्धि प्राप्त हुने विश्वासमा हनुमान नाच नाच्ने गरिएको संस्कृतिकर्मी छोटाले बताए । रामायणका प्रमुख पात्रसमेत रहेका हनुमानमा निहित पराक्रम, वीरता, अनुशासन र भक्तिभावलाई नृत्यको माध्यमबाट प्रदर्शन गरिने उनको भनाइ छ ।

'नाचमा १३ जोडी कलाकारले हनुमानको स्वरूप धारणा गरेर दिने प्रस्तुति कलात्मक हुन्छ, विभिन्न दस तालमा यो नाच नाचिन्छ', उनले भने, 'यो पाँच सय वर्षभन्दा पहिले भक्तपुरबाट सुरु भएको नाच हो, पछि त्यहाँबाट बागलुङ बसाइँ सरेर आएका नेवारहरूले हनुमान नाचको संस्कृति पनि सँगै ल्याए ।' बागलुङमा नेवार समुदायको इतिहास झन्डै तीन सय ५० वर्ष पुरानो छ ।

विसं १७६८ मा पहिलोपटक नेवार जाति बागलुङ प्रवेश गरेको इतिहासमा उल्लेख रहेको संस्कृतिकर्मी छोटाले बताए । उनका अनुसार मल्लकालीन समयमा भक्तपुरका राजा भुपतिन्द्र मल्लले हनुमान नाच सुरु गरेका थिए । हनुमान नाच मङ्गलबार, बिहीबार र शनिबार मात्र नाच्न मिल्ने परम्परा छ । पछिल्लो समय नेवारबाहेक अन्य समुदायका कलाकारले पनि नाचमा भाग लिने गरेका छन् ।

'धेरै कलाकार चाहिने हुँदा यो नाच महँगो छ, पूजाआजा, पोसाक, वाद्ययन्त्रलगायत सामग्री व्यवस्थापनमा खर्च बढी हुन्छ', संस्कृतिकर्मी छोटाले भने, ' नाच सञ्चालनको लागि प्रधान कजी (व्यवस्थापक), उपप्रधान कजी, कजी, पुजारी, वाद्यवादक, कलाकारलगायत एकैपटक सयौं व्यक्ति खटिनुपर्छ ।' हनुमान नाच बागलुङकै ऐतिहासिक र सांस्कृतिक धरोहरको रूपमा रहेको उनले बताए ।

देवालय, सलामी, छ ताल, आठ ताल, १२ ताल, २४ तालLगायत गरी दश तालमा नाच नचाइने हनुमान नाचका वाद्यवादक नीरज शाक्यले बताए । पुच्छरसहित हनुमानको भेष पहिरेका कलाकार एकापसमा लौरो जुभ्काउँदै मृदङ्ग र भ्याालीको तालमा नाच्ने गरेको उनको भनाइ छ । नाच्ने क्रममा कतिपयलाई 'वीर' उत्रने गरेको छ । 'बाजाको ताल छोपेर नाचिरहेका बेला क्कै ताल बिग्रियो भने पनि वीर उत्रने गर्छ, बाहिर दर्शकदीर्घामा रहेका व्यक्तिलाई पनि वीर उत्रन सक्छ', उनले भने, 'वीर उत्रेर शरीर काँप्ने, दौडने, भाग्ने गरेमा पुजारीबाट धूप सुँघाएर सामान्य अवस्थामा फर्काउने गरिन्छ ।'

हनुमान नाचका अग्रज कलाकार शाक्यले पौराणिक ग्रन्थ रामायणको कथाका विभिन्न घटना तथा प्रसङ्गमा आधारित रहेर ताल र नाचको संयोजन गरिएको बताए । 'हनुमानले लङ्का घेरेकोदेखि लडाइँ जितेर विजयोत्सव मनाएकोसम्मका भाव र विषयलाई नाच र सङ्गीतद्वारा प्रस्तुत गरिन्छ', उनले भने । बलियो हुने र आवाज राम्रो आउने हुँदा नाचमा पलाँसको लौरो प्रयोग गर्ने गरिएको छ । हनुमान नाचका मुख्य कलाकार (ज्यामाको) नाच्न थालेपछि मात्र अन्य कलाकारले नाच्न सुरु गर्दछन् ।

नाचको उत्पत्ति भएको भक्तपुरबाटै लोप हुन लागेको हनुमान नाचको संस्कृति बागलुङमा भने जीवित छ । पछिल्लो समय युवा पुस्ता पनि हनुमान नाचप्रति आकर्षित छन् । हनुमान नाच सुरु हुनुपूर्व हप्तौंसम्म नाचको पूर्वअभ्यास हुने गर्छ । नाच र वाद्यवादनमा पारङ्गतहरूबाट हनुमानको कला र विधि नयाँ पुस्तामा हस्तान्तरण हुँदै आएको छ ।

हनुमान नाचबारेको ज्ञान, कला र शिल्प सिकाउने उद्देश्यले परिषद्ले बेलाबेलामा प्रशिक्षणसमेत चलाउँदै आएको छ । यसपालि पनि प्रशिक्षणबाट नाच र वाद्यवादनतर्फ झन्डै ५० जना किशोर र युवा छानिएका थिए । उनीहरू नै अहिले हनुमान नाचमा कलाकारका रूपमा सहभागी छन् । विसं २०४६ मा हनुमान नाच संरक्षण परिषद् गठन भएपछि बागलुङमा नाचको संरक्षण तथा प्रवर्द्धनमा संस्थागत पहल सुरु भएको हो ।

# बच्चा दिनभरि मोबाइलमा हराउँछ भने, यसले निम्त्याउँछ गम्भीर समस्या !

एजेन्सी । आजकल, आमाबाबुले आफ्ना बच्चाहरूलाई डिजिटल युगमा घुलमिल गराउन बिहान सबेरैबाट मोबाइल फोन दिने गर्दछ । जब बच्चाले फोन प्रयोग गर्न थाल्छ, आमाबाबुलाई लाग्छ कि ऊ बुद्धिमान हुँदै गइरहेको छ तर यो लत उसको मानसिक स्वास्थ्यको लागि धेरै हानिकारक हुन सक्छ ।

भागलपुरको जवाहरलाल नेहरू मेडिकल कलेज अस्पतालमा गरिएको एक क्रस स्टडीमा चकित पार्ने तथ्यहरू प्रकाशमा आएका छन् । २ देखि ५ वर्ष उमेर समूहका बालबालिकाहरू मोबाइल फोनको लतमा यति फस्दै गएका छन् कि उनीहरूलाई आमाको आवश्यकता पनि महसुस हुँदैन । विशेष गरी खाना खाने समयमा, आमाबाबुले उनीहरूलाई मोबाइल फोन दिन्छन्, जसका कारण बच्चाहरूले फोन बिना खाना खानै मान्दैनन् ।

मोबाइलको लतले बालबालिकाको स्वभावमा पनि गहिरो प्रभाव पारिरहेको छ । निरन्तर कार्टुन र खेल हेर्ने भएकाले उनीहरुको स्वभाव आक्रामक बन्दै गएको छ । सानोतिनो कुरामा रिसाउनु, सामान यताउति फाल्नु र आमाबाबुको कुरा नसुन्नु यसका केही प्रमुख लक्षणहरू हुन् ।

फोनको लतका कारण बालबालिकाले आफ्नो एकाग्रता गुमाउँदै गएका छन् । तिनीहरू लामो समयसम्म कुनै पनि कुरामा ध्यान केन्द्रित गर्न असमर्थ हुन्छन्, जसले गर्दा तिनीहरूको अध्ययन र सिक्ने क्षमतामा असर पर्छ । यस कारणले गर्दा धेरै बालबालिकामा ध्यान घट्ने समस्या पनि बढ्दै गएको छ । जसको कारण बच्चाहरु मन्दबुद्धिका हुने खतरा बढ्दै गएरहेको अध्ययनले देखाएको छ ।

विज्ञहरू भन्छन् कि बच्चाको वास्तविक मानसिक विकास तब हुन्छ जब ऊ शारीरिक गतिविधिहरूमा संलग्न हुन्छ । दौडने, खेल्ने र सामाजिक अन्तरक्रियाले उनीहरूको दिमागको सही विकास गर्छ तर फोनको लतले उनीहरूलाई यी सबै गतिविधिहरूबाट टाढा लगिरहेको छ ।

तसर्थ अब हरेक आमाबुबाले बालबालिकाको लागि स्क्रिन टाइम निर्धारण गर्नु धेरै महत्त्वपूर्ण छ । ५ वर्ष मुनिका बालबालिकालाई मोबाइल फोन बिल्कुलै दिनु हुँदैन र ५ वर्षभन्दा माथिका बालबालिकाका लागि अधिकतम २ घण्टा स्क्रिन समय उपयुक्त मानिन्छ । यस समयमा पनि, शैक्षिक सामग्री मात्र हेर्न अनुमति दिइनु पर्छ ।

बालबालिकाहरूलाई बाहिर खेल्न प्रोत्साहित गर्नुहोस् । दौडनु, उफ्रिनु र खेल्नु उनीहरूको मानसिक र शारीरिक विकासको लागि धेरै महत्त्वपूर्ण छ । यदि तपाईंको बच्चा खेलकुद भन्दा मोबाइलमा बढी रुचि राख्छ भने, यो चिन्ताको विषय हुन सक्छ ।

यदि तपाईंको बच्चाले मोबाइल फोन प्रयोग गर्न जिद्दी गर्छ, खेल्नबाट जोगिन्छ वा साना कुरामा रिसाउन थाल्छ भने, यो उसलाई फोनको लत लागेको संकेत हो । यदि यस प्रकारको बानीलाई सही समयमा सच्याइएन भने, यसले भविष्यमा ठूला मानसिक र सामाजिक समस्याहरू निम्त्याउन सक्छ ।

# सिंगापुर संसदमा झूट बोलेको आरोपमा एक सांसदलाई लाखौं जरिवाना

एजेन्सी । सिंगापुरका भारतीय मूलका विपक्षी नेता प्रीतम सिंहलाई संसदीय समितिसमक्ष शपथ लिएर झूट बोलेको दुई आरोपमा अदालतले दोषी ठहर गरेको छ । यसका लागि उनलाई १४,००० सिंगापुर डलर जरिवाना गरिएको थियो । सिंगापुरमा कानुन धेरै कडा छ । तर यदि कुनै सांसदले नेपालको संसदमा झूट बोले भने के हुन्छ ? के उनीमाथि कुनै कारबाही गरिनेछ ताकि उनले मात्र होइन, अन्य सांसदहरूले पनि यो कुरा सम्झून् र पाठ सिकून ?

यद्यपि, सिंगापुरका भारतीय मूलका सांसद जेल र भारी जरिवाना दुवैबाट बच्न सफल भए । सिंगापुरको संविधानले यदि कुनै बहालवाला सांसदले संसदमा झूट बोलेमा, कम्तिमा एक वर्षको जेल सजाय वा कम्तिमा १०,००० सिंगापुर डलर जरिवाना भएमा उसले आफ्नो पद गुमाउने व्यवस्था गरेको छ । उनी चुनाव लड्न पनि अयोग्य हुनेछन् । त्यसैले, सिंगापुरका सांसद यो कठोर सजायबाट बचे ।

सिंगापुरको निर्वाचन विभागले सिंहमाथि लगाइएको प्रतिबन्ध उनलाई सांसदको रूपमा अयोग्य ठहराउने तहसम्म नपुगेको पुष्टि गरेको छ । अब उनी अर्को चुनाव लड्न सक्छन् ।

४८ वर्षीय सिंहलाई वर्कर्स पार्टीका पूर्व सांसद रईस खानको आचरणको छानबिन गर्ने संसदीय समितिसमक्ष झूटो बयान दिएकोमा दोषी ठहर गरिएको थियो । खानले यौन दुर्व्यवहार पीडितलाई प्रहरी चौकीमा साथ दिएको बारेमा बनावटी कथा बनाएको स्वीकार गरेका थिए । मुद्दाको सुनुवाइ चार महिना अघि सुरु भएको थियो ।

संसारभरका संसदहरूमा झूट बोल्ने सम्बन्धी फरक-फरक नियम र परिणामहरू छन् । सामान्यतया हरेक देशको संसदले यसलाई गम्भीर विषय मान्दछ । यद्यपि, नेपाल लगायत धेरै देशहरूमा, संसद सदस्यहरूले "संसदीय विशेषाधिकार" अन्तर्गत केही स्वतन्त्रता पाउँछन्, जसको माध्यमबाट उनीहरू संसदमा बयान दिँदा कानुनी कारबाहीबाट बच्न सक्छन् । यद्यपि, यो विशेषाधिकार झूट बोल्ने वा अन्य गलत कामहरूमा लागू हुँदैन ।

यदि नेपालमा कुनै सांसदले जानाजानी झूट बोल्छ भने । यदि यो प्रमाणित भयो भने, उनलाई संसदबाट निलम्बन गर्न सकिन्छ । यदि कुरा गम्भीर छ भने कानुनी कारबाही पनि गर्न सकिन्छ । तर, नेपालको संसदीय इतिहासमा कुनै पनि सांसद विरुद्ध यस्तो मुद्दा आएको छैन, न त यस्तो केही प्रमाणित भएको छ र न कुनै सजाय दिइएको छ ।

यदि कुनै सांसदलाई संसदमा झूट बोलेको आरोप लाग्यो भने, यो कुरा पहिले संसद भित्र वा बाहिर सार्वजनिक रूपमा उठाइन्छ । यो आरोप सामान्यतया विपक्षी सांसद, मिडिया वा अन्य संसदीय सदस्यले लगाउन सक्छन् । कुनै सांसदले गलत जानकारी दिएको स्पष्ट रूपमा स्पष्ट हुँदा, सदनमा प्रश्नोत्तरको समयमा होस् वा अन्य कुनै विषयमा, उसलाई झूट बोलेको आरोप लगाइन्छ । तर नेपालमा कुनै पनि सासदले झुट बोलेको सन्दर्भमा मिडियाबाजी बाहेक कुनै कारबाही हुने गरेको छैन । साथै यस विषयमा हालसम्म पनि संसदले कारबाही गरेको छैन । तर नेपालमा सासदहरुको माग अनुरुप संसदीय रेकर्डबाट उक्त भन(ाई हटाउन भने गरिएको देखिन्छ ।

त्यसपछि यो विषय संसदीय समितिमा जान सक्छ ।

न्पालको संसदमा, सांसदहरूले "संसदीय विशेषाधिकार" पाउँछन्, जसको अर्थ उनीहरूले सदनमा दिएको अभिव्यक्तिको लागि अभियोजनबाट कानुनी रूपमा सुरक्षित हुन्छन् । यद्यपि, यो विशेषाधिकारको दुरुपयोग गरेकोमा सांसद विरुद्ध अनुशासनात्मक कारबाही गर्न सकिन्छ ।ुथै संसदीय रेकर्डबाट सासदको रेकर्ड हटाउन भने सकिन्छ ।

यदि सांसदले जानाजानी झूट बोलेको प्रमाणित भयो भने, यसलाई संसदीय विशेषाधिकारको उल्लङ्घन मान्न सकिन्छ । यदि आरोप गम्भीर छ भने, यो मुद्दा संसदीय समितिमा पठाउन सकिन्छ । यो समितिले आरोपहरूको छानबिन गर्छ र आरोपहरू सत्य हुन् वा होइनन् भन्ने निर्णय गर्छ । यस विषयमा निष्पक्ष छानबिन गरेपछि समितिले आफ्नो प्रतिवेदन सदनमा प्रस्तुत गर्दछ ।

यदि अनुसन्धानले सांसदले झूट बोलेको पत्ता लगायो भने, सभामुख वा राष्ट्रियसभाका सभापतिले यस विषयमा ध्यान दिने अपेक्षा गरिएको छ । मुद्दाको गम्भीरता हेरेर उनीहरूले कारबाही गर्न सक्छन् । यसमा सांसदलाई निलम्बन गर्ने, संसदीय विशेषाधिकारको हननबारे स्पष्टीकरण दिन बोलाउने वा माफी माग्ने समावेश छन् । र अन्य प्रक्रिया हुन सक्छ ।

यदि कुरा धेरै गम्भीर छ भने, सांसदको सदस्यता समाप्त गर्ने विकल्प पनि हुन सक्छ । यसका लागि सदनमा मतदान प्रक्रिया हुन सक्छ, जसमा बहुमत सदस्यहरूले निर्णय लिन्छन् । सामान्यतया, यो मुद्दा पूर्ण रूपमा प्रमाणित भएपछि मात्र हुन्छ ।

- ब्रिटिश संसदमा "झूटा बयान" एक अपराध हो । यदि कुनै सांसदले संसदमा झूट बोलेमा जरिवाना, जेल सजाय वा सदस्यता समाप्ति जस्ता गम्भीर सजाय हुन सक्छ । यदि कुनै सांसदले जानाजानी झूट बोले भने । यदि यो प्रमाणित भयो भने, उनीमाथि फौजदारी अभियोग लाग्न सक्छ । बेलायतमा, संसदीय कार्यवाहीमा ठगी गर्नु अत्यन्तै गम्भीर मानिन्छ ।

अमेरिकामा गम्भीर अपराध

संयुक्त राज्य अमेरिकामा, "झूटा बयान" दिनु गम्भीर अपराध हुन सक्छ । यदि कुनै सांसदले संसदमा झूट बोले र त्यो झुटो बयान वा ठगीको हिस्सा भएको पाइयो भने, यो "झूटो बयान" अन्तर्गतको अपराध हुन सक्छ । यसले गर्दा उनीहरू विरुद्ध आपराधिक अभियोगहरू दायर हुन सक्छन्, जसमा जरिवाना र जेल सजाय सहितको दोषी ठहर हुन सक्छ ।

अष्ट्रेलियामा, राजीनामा दिन बाध्य पारिन्छ

अष्ट्रेलियामा, यदि कुनै सांसदले संसदमा जानाजानी झूट बोले भने, यसलाई अनैतिक मानिन्छ । कुनै ठोस फौजदारी सजाय नभए पनि, यसले सांसदको प्रतिष्ठालाई गम्भीर रूपमा हानि पुर्याउन सक्छ । उनलाई राजीनामा दिन बाध्य पार्न सकिन्छ । कतिपय अवस्थामा, झूट बोल्दा चुनावी धाँधलीको आरोप पनि लाग्न सक्छ ।

चीनमा के हुन्छ ?

यदि कसैले चीनको संसद (नेशनल पिपुल्स कांग्रेस) मा झूट बोल्यो भने, कानुनी र संसदीय नियमहरू अन्तर्गत उसको विरुद्ध कारबाही गर्न सकिन्छ । चीनमा, कम्युनिष्ट पार्टी र सरकारका नीतिहरूप्रति वफादारी र निष्ठालाई उच्च मूल्याङ्कन गरिन्छ । यदि कुनै सदस्य वा अधिकारीले जानाजानी झूट बोले वा गलत जानकारी प्रदान गरेमा, उसले अनुशासनात्मक कारबाही, पदबाट हटाउने वा कानुनी दायित्व पनि भोग्न सक्छ ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

# सम्पादकीय

## हिउँदे अधिवेशन विना उपलब्धि खेर जाने लक्षण

प्रमुख प्रतिपक्ष र प्रतिपक्षको चौतर्फी विरोध र दबाब पछि अपेक्षाकृत ढिलो गरी सुरु भएको संसद्को हिउँदे अधिवेशन पनि राजनीतिक दलका नेताहरूको 'प्रतिष्ठाको लडाइँ' का कारण खेर जाने सन्देह बढ्दै गएको छ । सरकारले संसद अधिवेशन नबोलाएर अध्यादेशबाट नै सरकार संचालनको प्रक्रिया थाले पछि प्रमुख प्रतिपक्ष, प्रतिपक्ष र जनमानसबाटै चर्को रुपमा विरोध शुरु भएको थियो । साथै सरकारको रबैयाका कारण सरकारमा सामेल दलकै केही नेता तथा कार्यकर्तासिमेतले सरकारको विरोध गर्न थालेका थिए । जसको कारण सरकार बाध्य भएर अन्ततः हिउँदे अधिवेशन बोलाउन बाध्य बनेको थियो । अहिले सदन चलिरहेको अवस्थामा पनि सत्ता र विपक्षी दलका नेताहरू सदनभित्र र बाहिर दुवैतिर कटु आरोपप्रत्यारोपमा लागेका छन् ।

सत्ता र विपक्षका बीचमा त विवाद कायमै रहेको अवस्थामा सभामुख देवराज घिमिरे पनि विवादमा तानिएका छन् । सभामुखले सरकारी बलमिच्याइँविरुद्ध बोल्ने समय नदिएर संसदीय मूल्यमा प्रहार गरेको आरोप विपक्षका सांसदहरूबाट लगाइएको छ । एउटा विधेयकमा प्रचलित अभ्यासविपरीत मन्त्रीले नै संशोधन प्रस्ताव गरेको विरोधमा विपक्षका सांसदहरूले बोल्नका लागि समय माग्दा सभामुखले समय नदिएको र विपक्षको आफ्नो आवाज दबाउन खोजिएको रूपमा विपक्षहरुले मिडिया र आमसर्वसाधारण समक्ष आफ्नो धारणा राखी रहेका छन् ।

अर्को तर्फ सत्ता गठवन्धनमा रहेका दलहरु भने सरकारले अध्यादेश मार्फत ल्याएको विधेयक जसरी पनि संसदबाट पारित गराई छाड्ने रणनीतिमा लागेको देखिन्छ । यसरी विपक्षीको सहमति विना ल्याउन खोजिएको अध्यादेशका सन्दर्भमा सत्तापक्ष र विपक्षबिच संसदमा एक प्रकारको दोहोरी चलिरहेको छ ,

संसदीय व्यवस्थामा विशेषगरी संसद्को सञ्चालनमा निश्चित विधि र प्रक्रिया अपनाइने गरिन्छ । कतिपय अभ्यासहरूको औचित्य एवं आवश्यकतामा प्रश्न उठे पनि वा हास्यास्पद लागे पनि तिनको पालना गर्ने गरिएको हुन्छ । औपचारिक प्रकृतिका प्रक्रिया पनि पूर्ण पालना गरिन्छ । यसैले सरकारले गरेको प्रक्रियागत त्रुटिका विषयमा सांसदहरूले बोल्ने समय माग गरेपछि सामान्यतः सभामुखले अनुमति दिने अभ्यास छ । यस्तै, बैठक सञ्चालनका हकमा सभामुखको निर्णय नै अन्तिम हुने र त्यसलाई स्वीकार गर्ने पनि गरिन्छ ।

सभामुखले बोल्न समय नदिएपछि विपक्षी दलका सांसदहरूले संसद्को नियमित कारबाहीमा पनि सरकारले प्रक्रिया मिचेको विषय उठाएका छन् । यस विवादलाई दुवै पक्षले 'प्रतिष्ठाको प्रश्न' बनाए भने संसद्मा गतिरोध उत्पन्न हुनसक्छ ।

सामान्यतः सरकार सत्ता पक्षको र संसद् विपक्षको भन्ने मान्यता रहेको छ । यसैले सत्ता पक्षकै सांसदमध्ये एक हुँदा पनि सभामुखले विपक्षलाई बढी समय दिएको गुनासो सुनिने गर्छ । सभामुख देवराज घिमिरेबाट पनि विपक्षले त्यही व्यवहारको अपेक्षा गर्नु अस्वाभाविक होइन । साथै, राज्यको महत्त्वपूर्ण अङ्ग भएकाले शासन सञ्चालनका क्रममा कतिपय अवस्थामा सभामुखले सरकारलाई साथ र समर्थन दिनुपर्ने हुन्छ । सभामुखले विपक्षी सरह व्यवहार गर्दा विगतमा धेरैपटक सदन गतिरोधको सिकार भएको पनि देखिएको थियो ।

संविधान जारी भए यता संसद्को काम कारवाही प्रभावकारी रुपमा अघि बढ्न नसकेको सत्तापक्ष र विष्पक्षीहरुको समेत धारणा रहेको छ । संविधान कार्यान्वयनका लागि बनाउनै पर्ने कानुनहरूसमेत बन्न सकेका छैनन् । विडम्बना, सांसदहरू भने सरकारलाई कानुन बनाउन दबाब दिनुभन्दा संसदमा हंगामा खडा गर्ने र संसद चल्न नदिने रणनीतिमा नै लाग्ने गरेको विगतको घटनाक्रमले देखाएको छ ।

यो प्रतिनिधि सभाको पनि दोस्रो कार्यकाल हो र यसको एक तिहाइ कार्यकाल समाप्त भइसकेको छ । तर उपलब्धि भने शुन्य रहेको छ । विगतदेखि नै संसद सुभारु रुपमा चल्न सकेको छैन । संसदमा सासदहरुको उपस्थितिसमेत न्युन हुने गरेको छ । यसको कारणमा मूलतः सभामुखको नेतृत्व क्षमताको अभावदेखि आआफ्ना नेताको अहङ्कार तुष्टिलाई सांसदहरूले प्रतिष्ठाको प्रश्न बनाउनुलाई मानिएको छ ।

यसैले बर्तमान अधिवेशनलाई उपलब्धिमूलक बनाउन सभामुखले अग्रसरता देखाएर विपक्षलाई विश्वासमा लिनु उचित हुनेछ । विपक्षले पनि विवादका लागि बहाना खोज्ने होइन रचनात्मक आलोचना गर्नुपर्छ । विपक्षले निहुँ खोज्न र सत्ता पक्षले बलमिचाइँ गर्न नछाड्ने हो भने यो देशको लागि दुर्भाग्य हुनेछ नै साथै सांसदहरूका लागि पनि प्रत्युत्पादक हुनेछ । अन्ततः यो हिउँदे अधिवेशन अर्थात विधयेक अधिवेशन पनि विगत कै जस्तो उपलब्धि विहीन हुने त होइन भन्ने आशंका उब्जिएको छ । यसमा सरकार पक्ष, प्रमुख प्रतिपक्ष, प्रतिपक्ष र अझ बढर सभामुख सचेत बन्न आवश्यक छ ।

# इतिहासले न्याय नगरेका राना मगर

● राजकुमार दिक्पाल

नेपाली इतिहासकारहरूले न्याय गरेर इतिहास लेखिदिएका भए कालु पाँडे, दामोदर पाँडे, अमरसिंह थापा, भक्ति थापा र बलभद्र कुँवर, रामकृष्ण कुँवर, अभिमानसिंह बस्न्यात आदिको जस्तै विराज थापा मगर, सुरसिंह राना मगर, कालीदाश खड्का मगर, बन्धु राना मगर, देवदत्त थापा मगर, प्रतिमन राना मगर, प्रबल राना मगर, जसपाउ थापा मगर, रिपुमर्द्दन थापा मगर आदि योद्धाको पनि ऐतिहासिक गाथा नेपाली पाठ्यक्रममा पढ्न पाइने थियो । विद्यालय तहदेखि विश्वविद्यालयसम्म जसको बारेमा पढाइयो - नेपाली मनमा उनीहरू मात्रै चर्चित र स्थापित भए । अनि उस्तै र उत्तिकै योगदान गरेका भने ओझेलमा परे ।

कालान्तरमा नेपालका पाँडे, थापा, बस्न्यात क्षेत्री काजी कहलाए, कुँवरमध्ये रामकृष्ण कुँवरका खलक त पछि 'राणाजी' नै कहलाए। तर, नेपाल निर्माणमा उत्तिकै योगदान दिएका मगरको ऐतिहासिक गाथा गाइदिने कसले ?

द्रव्य शाहले खड्का मगरको राज्य गोरखामा हमला गरेर वि.सं. १६१६ मा आफ्नो आधिपत्य स्थापित गरेपछि उनले ६ थरका योग्य व्यक्तित्त्वलाई समेटेर भारदारी बनाउँदा अर्ज्याल, खनाल, पाँडे, पन्थ, बोहरा र राना मगरलाई समेटेका थिए । उनको भारदारीमा गङ्गाराम राना मगरलाई न्याय विभागको जिम्मेवारी दिइएको थियो । पछि गोरखाली भारदारीमा थापा मगरलाई पनि समेटिएको थियो । तर वि.सं. १९०३ भदौ ३१ गते राति जङ्गबहादुरले रचना गरेको षडयन्त्रअनुसार भएको कोतपर्वका पहिलो शिकार तात्कालीन जनरल अभिमानसिंह राना मगरको हत्यासँगै नेपाली राजनीतिमा मगरले प्राप्त गर्दै आएको परम्परागत विरासतमा पूर्णविराम लाग्यो। कालान्तरमा उनीहरूको वीरतापूर्ण इतिहास पनि ओझेलमा पर्न गयो ।

यो लेखमा गोरखा राज्यमा योगदान गर्ने मगरमध्ये राना थरका मगरको ओझेलमा परेको इतिहासमा प्रकाश पार्ने प्रयास गरिएको छ ।

मगरलाई पहिले "मंग्वर" भनिँदो रहेछ । नेपाल संवत् २२१ (वि.सं. १११७) को एक ताम्रपत्रमा मगरको राना थर जनिने एक व्यक्तिको नाम उल्लेख भएको पाइएको छ । धनबज्र बज्राचार्यअनुसार यो ताम्रपत्र जारी भएको बेला नेपाल मण्डलका अधिपतिका रुपमा शिवदेवको उल्लेख भएको र ' मंग्वर' विषयका अधिपतिका रुपमा रामदेवको उल्लेख भएको छ ।

"मंग्वर" शब्द वर्तमान मगर शब्दको पूर्वरूप हो भन्ने कुरामा कुनै शंका छैन । मध्य नेपाल अर्थात गण्डकी प्रस्रवण क्षेत्रका केही इलाका "मगरात" भनेर पछिसम्म नै प्रचलित थिए । यही परम्पराअनुसार पृथ्वीनारायण शाहले आफ्नो उपदेशमा "मगरातका राजा त मै हुँ" भन्ने भाव आफ्नो उपदेशमा व्यक्त गरेका छन् । यसकारण "मंग्वर" विषय उक्त मगरात प्रदेशभित्र रहेको थियो भन्ने यस प्रसङ्गबाट थाहा हुन्छ (धनबज्र बज्राचार्य, "गोपाल राजवंशावलीको ऐतिहासिक विवेचना"-२०६६ :१८-१९)।

अर्का इतिहासकार ज्ञानमणि नेपालले "नेपालनिरुपण " (२०५५ :१२५-२६)मा उल्लेख गरेअनुसार उक्त ताम्रपत्रमा उल्लेख भएको झान्टेश्वर महादेव स्थानमा "मग्वरविषय" शब्द परेको र त्यहाँ उल्लेख भएमध्ये एक सोहव राने पनि भएकोले ती सोहव राने एक जना महत्त्वपूर्ण मगर व्यक्तित्व थिए भन्ने प्रमाण मिल्छ । ताम्रपत्रमा "इदा भावो धक्नप र सोहव राने" उल्लेख भएकोले पाञ्चाली गुठियारमध्ये पहिलो भावो वा भाओ उपनाम भएका धनीमानी व्यक्ति थिए । दोस्रा स्थानीय व्यक्ति र तेस्रा राना मगर देखिन्छन् । नेपालले यो ताम्रपत्रमा "मग्वरविषय" भन्ने उल्लेख भएबाट पश्चिम नेपालको गण्डकी प्रदेशको मगरातमा झण्टेश्वर स्थान थियो भन्न सकिने आधार प्रकट गरेका हुन् ।

मगर जातिका सम्बन्धमा यो पुरानो लिखत ऐतिहासिक महत्त्वको थियो भन्ने प्रमाण निक्कै बलियो भएर आउँछ।

ताम्रपत्रको व्यहोरा यस्तो छ -

शुभमस्तु, सम्वत् २२१ मार्गशुक्ल दशम्यां। राजाधिराज परमेशश्वर : श्रीमतशिवदेव महाराजै श्रीरामदीव समन्तविजयराजै मंग्वरविषये झांटेश्वर भट्टारकास ताडे गोठि पञ्चालिकेण : च्छेपरम् ग्वण्ड ओपलेम्॥ श्री इदा भावो नायक। श्रीधक्नप नायक श्रीसोहव राने। एते पधाण वर्त्तनीय॥ (नेपाल, २०५५ :१३०)।

मगरको थर निर्धारण

मगर र क्षेत्रीका थरमध्ये कतिपय एउटै छ, जस्तो; खड्का, थापा आदि । इतिहास शिरोमणि बाबुराम आचार्यको धारणाअनुसार मगरहरू विशिष्ट किसिमका सैनिक जातिका रुपमा प्रसिद्ध छन् । मगरहरूमाहरूथापा" र "राना" थर रहेको छ । खस वर्गका क्षेत्रीयमा पनि थापा थर रहेको छ । तीन पुस्तासम्म लगातार लडाइँका मैदानमा विजयी भएमा यस्ता मगर तथा यिनका छोरा नाती "राना" बन्न सक्ने मान्यता थियो । शुद्धताका हिसावले "आले" थर भएका मगर चोखा मानिदै आएका छन् । इसाको अठारौं शताब्दीको उत्तरार्धमा गोरखाली सैनिकको सङ्गठन हुँदा खश, मगर र गुरुङ गरी तीन थरि जातका नागरिकलाई मिलाएर एउटा विशिष्ट किसिमको सैनिक संस्कृतिको विकासको क्रम सुरु गरिएको थियो । यही संस्कृतिको आधारमा पृथ्वीनारायण शाहले आफ्नो अभियान सुरु गरेका थिए (बाबुराम आचार्य, "प्राचीनकालको नेपाल"-२०६० :३०-३१)।

मगरहरूमा खासगरी बाह्र मगरातमा राना र आले बाहेक थापा र खड्का थरका मगरहरू पनि प्रशस्त पाइन्छन्। थापा र खड्का कुनै समयमा पद थियो, पछि यो थरमा परिणत हुन पुग्यो ।

कतिपय थर व्यक्तिले प्राप्त गरेको दर्जा (पद)बाट पनि उत्पत्ति भएको पाइन्छ । थापाहरू कोही क्षेत्री छन्, कोही मगर पनि छन् । खस साम्राज्यको इतिहासमा थापा भन्नाले सैनिक पद बुझाउँथ्यो । उनीहरूलाई जागिरका रुपमा दिइएको भूमिकालाई "थपालो" भनिन्थ्यो । थापा सैनिक पद हुँदा त्यही पद व्यक्तिको नाम पछाडि जोडिँदै जाँदा थर बन्न पुग्यो । यस्तै तरबारधारी सैनिकलाई "खड्का" पद दिइन्थ्यो । गाउँको रक्षक काम गर्नेलाई "रोकाया" पद दिइन्थ्यो । ती पदहरूमा मगरले काम गर्दा मगरका र खस क्षेत्रीले काम गर्दा खस क्षेत्रीमा थरहरू बन्न पुगे (डा. विनोद थापा, "राष्ट्रिय विभूति अमरसिंह थापा"-२०७० :१, ४ र ५)

मगरको राना, थापा र आले मगरमा पनि विभिन्न उपथरहरू रहेका छन् । लेखक जनकलाल शर्माले "हाम्रो समाज एक अध्ययन" (२०७५ :३०७-१२) मा राना मगरको १३४, थापा मगरको १२१ र आले मगरको ११६ उपथर प्रस्तुत गरेका छन् ।

पृथ्वीनारायण शाहको उपदेशमा राना मगर

पृथ्वीनारायण शाहको उपदेश भनेर इतिहासकार हरूले चर्चा गर्दै आएको पुरानो लेखोटमा मगरात र राना मगरको प्रसङ्ग ठाउँमा परेको छ । पृथ्वीनारायण शाहले आफूलाई "मगरातको राजा हुँ" भनेका छन् । बाबुराम आचार्य र योगी नरहरिनाथले"बडामहाराजाधिराज पृथ्वीनारायण शाहको दिव्य-उपदेश"(२०६१ :५९) मा उल्लेख गरेअनुसार पृथ्वीनारायण शाहले "नेपालको किताप हेर्दा तुर्काना मंग्रात मुग्लाना हुन्या रहेछ र तुरकाना अघि भैगयेछ. मगरात्को राजा मै हुं" भनेका छन् ।

यो उपदेशमा ददा सुरथिसिं रानासहितका भारदारहरूलाई सम्बोधन गरिएको (आचार्य र योगी, २०६१ :२९) भनिएबाट त्यो बेला दरबारमा रानाको निक्कै ठूलो इज्जत थियो भन्ने देखिन्छ ।

इतिहासकार दिनेशराज पन्तले "गोरखाको इतिहास" पहिलो भाग (२०४१ :२८०-८१) मा उल्लेख गरेअनुसार कालु खड्कासँगै पृथ्वीनारायण शाहबाट वि.सं. १८३० भक्तपुरको अमालिदार नियुक्त भएका र नरभूपाल शाहको समयमा कपरदार पद पाएका सुरसिंह राना नै पृथ्वीनारायण शाहको उपदेशमा उल्लेख भएको सुरथिसिं राना हुनु सम्भव रहेको छ ।

उपदेशमा पृथ्वीनारायण शाहले सपनामा एक जना पुजारी राना मगरकी छोरीलाई दुवै हातमा खड्ग लिएर आएको देखेको र तिनले आफ्नो दुवै खड्ग पृथ्वीनारायण शाहलाई दिँदै "तिम्रो मनोकाङ्क्षा पुरा हुन्छ" भनेको उल्लेख छ । निद्राबाट ब्यूँझेर आफ्नो ज्योतिषहरू भानु जैशी, कुलानन्द जैशी र पुजारी राना मगरलाई सोध्दा उनीहरूले ती सपनामा आउने पुजारी राना मगरकी छोरी माई (देवी) को रुपमा आएको बताएपछि पृथ्वीनारायण शाह उत्साहित भएका थिए (आचार्य र योगी, २०६१ :४०-४१)।

उपदेशमा पृथ्वीनारायण शाहले नुवाकोट कुरेर बसेका तात्कालिन कान्तिपुरका भारदार जयन्त राना र उनका छोरा शङ्खमणिको प्रसङ्ग पनि उल्लेख गरेका छन् । नरभूपाल शाहको समयमा गोरखा राज्यकै भारदार रहेका जयन्त राना पछि गोरखा राज्यसँग चित्त दुखाउँदै त्यहाँबाट पलायन भई नुवाकोट पुगेर कान्तिपुरका राजा जयप्रकाश मल्लको सेवामा समर्पित भएका थिए । पृथ्वीनारायण शाहले जयन्तलाई ग्यामी राना भनेका छन् भने नुवाकोटको युद्धमा दलमर्दन शाहको प्रहारबाट मारिएका जयन्तका छोरा शङ्खमणिलाई राना मात्रै भनेका छन् (आचार्य र योगी, २०६१ :४२-४३)।

यताबाट हेर्दा महत्त्वपूर्ण ऐतिहासिक घटनामा राना मगरको प्रसङ्ग उल्लेख नगरी नहुने अवस्था छ।

नुवाकोट आक्रमणमा रानामगर

कान्तिपुर अधिनस्थ तात्कालीन नुवाकोटमा उमराव भई बसेका जयन्त राना मगर र उनका छोरा शङ्खमणिको प्रसङ्ग माथि नै उल्लेख भइहाल्यो । उनीहरूका साथ प्रशस्तै मगर सेना थिए भन्नेमा कुनै शङ्का छैन । यता पृथ्वीनारायण शाहको गोरखाली फौजमा रहेर नुवाकोट आक्रमण गर्न जाने मगर र त्यसमा पनि राना मगरहरू प्रशस्तै थिए ।

पृथ्वीनारायण शाहको नुवाकोट आक्रमण गर्न जाने अभियानमा कृष्णमणि राना, जस राना, देवु राना, जसवन्त राना, लक्ष्मी राना, जसु राना, माधव राना, इन्द्रमणि राना, रामसिंह राना, प्रतिमन राना, दलजित राना, लोहर राना, यसमन राना, सुगेत राना, साने राना, चन्द्रमणि राना, चामु राना उमापति राना थिए । तीमध्ये मुख्य देवु राना, प्रतिमन राना र बलभद्र राना थिए । यो युद्धमा गोरखा दरबारको रक्षार्थ काजी रुद्र शाहका साथ काजी महेश्वर पन्त र कालु राना ग्याङ्मी थिए ।

पृथ्वीनारायण शाह आक्रमणका लागि अघि लागेको तीनधारेको बाटोमा युद्धका लागि अघि बढ्ने राना मगरहरूमा कणिमणि राना, बसु राना, दलजित राना, जसवन्त राना, सुगे राना, सानु राना, चन्द्रमणि राना, रत्नमणि राना, परशुराम राना, जगन्मणि राना, पति राम राना, चामु राना, उमापति राना, वहावल राना तथा भिकरी राना सक्रिय योद्धाका रुपमा सहभागी थिए ("प्राचीन नेपाल" सङ्ख्या २१, कात्तिक २०२९ :२७-२८)।

वि.सं. १७९६ जेठ बदी रोज १ को नरभूपाल शाहकालीन एक तामपत्रमा लोहरी राना र जसबु रानाको पनि उल्लेख छ । नुवाकोटमा आक्रमण गर्न जाने गोरखाली योद्धाहरू लोहर राना र जस राना सम्भवतः नरभूपाल शाहकै समयमा सक्रिय उनै लोहरी राना र जसवु राना हुनसक्छन् । यस ताम्रपत्रको फोटो यो लेखकले गोरखा मान्वुकी ताम्रपत्र प्राप्त गर्ने रामु घलेका सन्तति सिर्जना घलेबाट प्राप्त गरेको हो ।

मूलकाजी सर्वजित राना

राजा प्रतापसिंह शाहको अल्पायुमै देहान्त हुने बित्तिकै राजदरबारमा अनेक खेलचुक्ली सुरु हुन थाल्यो । राजा रणबहादुर शाह नाबालक थिए । राजकुमार बहादुर शाह र राजमाता राजेन्द्रलक्ष्मी शाह कहिले मिलेर शासन चलाउने त कहिले एकअर्कालाई दबाउने खेलमा लागे । आफू शक्तिमा आएको बेला राजेन्द्रलक्ष्मीले प्रतापसिंह शाहकै समयदेखि सक्रिय भारदार सर्वजित रानालाई मूलकाजी बनाइन् ।

क्रमश.....

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# एपिक नेपाल म्युजिक अवार्ड चैत २ गते हुने

काठमाडौं । यस वर्षको पाँचौं एपिक नेपाल म्युजिक अवार्ड मध्यपुरथिमि नगरपालिकास्थित ऐतिहासिक सम्पदास्थल निगु पुखु दुई पोखरीमा चैत २ गते आयोजना हुने भएको छ ।

एपिक नेपाल म्युजिक प्रालिले शनिबार मध्यपुरथिमिको शंखधर पार्कमा आयोजना गरेको पत्रकार सम्मेलनमा अवार्ड वितरणबारे जानकारी दिँदै मध्यपुरथिमि नगरपालिकाका निवर्तमान नगरप्रमुख मदनसुन्दर श्रेष्ठले विभिन्न ३२ विधामा यस वर्ष अवार्ड वितरण गरिने बताए ।

उनले यस वर्षको अवार्ड प्रदानमा लाइफ टाइम एचिभमेन्ट अवार्ड वरिष्ठ कलाकार वसुन्धरा भुसाललाई प्रदान गरिने घोषणा गरे । पत्रकार सम्मेलनमा सदावहार नायकको अवार्ड भुवन केसीलाई, रियल हिरोको अवार्ड पल शाहलाई, पत्रकार सम्मान ऋषि धमलालाई र युवा पत्रकार सम्मान ऋषि थपलियालाई प्रदान गरिने उनले बताए ।

प्रत्येक विधामा उत्कृष्ट पाँच जनाको नाम छनोट भएकामा अब सर्वोत्कृष्ट एकको छनोट गरी अवार्डका लागि सिफारिस गर्न पाँच जनाको निर्णायकमण्डल गठन गरेको श्रेष्ठले बताए । कलाकार मिथिला शर्माको नेतृत्वमा निर्देशक सुब्रत आचार्य, गायक चन्द्र शर्मा, निर्देशक प्रकाश भट्ट र गायिका प्राश्ना शाक्य रहेको निर्णायकमण्डल गठन गरिएको उनले बताए ।

निवर्तमान नगरप्रमुख श्रेष्ठले भने, 'प्रत्येक वर्ष हुँदै आएको एपिक नेपाल म्युजिक अवार्डमा अब दुई वर्षमा आयोजना गरिने भएको छ, छैटौं संस्करणको अवार्ड वितरण २०८३ मा हुनेछ ।'

# नेपालका ३० चलचित्र नेपाल अफ्रिका चलचित्र महोत्सव २०२५ मा सहभागी हुने

काठमाडौं । विलक्षण क्रियसन प्रा.लि. र कलेज अफ जर्नालिजम एन्ड मास कम्युनिकेसनको आयोजना तथा चलचित्र विकास बोर्डको सहआयोजनामा १३ औं संस्करणको 'नेपाल अफ्रिका अन्तर्राष्ट्रिय चलचित्र महोत्सव २०२५' 'नाइफ'को तयारी अन्तिम चरणमा पुगेको जनाएको छ । महोत्सव यही ९ फागुनबाट ११ फागुनसम्म नेपाल पर्यटन बोर्ड भृकुटीमण्डपमा आयोजना हुँदै छ । महोत्सवका अध्यक्ष डा. मञ्जु मिश्रका अनुसार यो महोत्सवको राष्ट्रिय चलचित्रको प्रतिस्पर्धामा यस पटक २९ वटा लामा छोटा चलचित्र महोत्सवको फाइनलको लागि चयन भएका छन् । महोत्सवमा प्राप्त ७३ वटा चलचित्र, वृत्तचित्र, लघु चलचित्र, आदिवासी जनजाति चलचित्र तथा सांगीतिक लघु चलचित्र र विद्यार्थी चलचित्रबाट २८ वटा लामा छोटा चलचित्र महोत्सवको फाइनलको लागि चयन भएका हुन् ।

जसमा कथानक चलचित्र सात वटा, लघु चलचित्र ७ वटा, सांगीतिक लघु चलचित्र ५ वटा, वृत्तचित्र ४ वटा, आदिवासी जनजाति चलचित्र ३ वटा, विद्यार्थी चलचित्र २ वटा रहेका छन् । महोत्सवमा यस पटक प्राप्त १६ वटा कथानक 'फिचर' चलचित्रहरू मध्यबाट निर्णायक टिमले फाइनलको लागि ७ वटा चलचित्र चयन गरेको हो । शँकर घिमिरे निर्देशित तेल भिसा, ऋषिराज आचार्य निर्देशित द्रौपदी, दीपाश्री निरौला निर्देशित छक्का पञ्जा ५, माधवराज खरेल निर्देशित चिठ्ठी, घनश्याम लामिछाने निर्देशित लन्डन टु पेरिस, कृषा चौलागाईं निर्देशित ऐँचो पैँचो र विनोद बुढाथोकी निर्देशित संकल्प रहेका छन् । संकल्प पहिलो पटक जापानमा निर्माण भएको नेपाली चलचित्र हो ।

यसै गरी यो महोत्सवमा फाइनल चरणको लागि लघु चलचित्र तर्फ रौनक विक्रम कँडेल निर्मित निर्देशित रेड, प्रद्युम्न मिश्र निर्देशित खुसी, सन्तोष सुवेदी निर्देशित द ट्रिम्यान, विकास मगर 'विश्वास' निर्देशित खिल, कृष्णप्रसाद धिताल निर्देशित एप्रोन, गृष्म श्रेष्ठ निर्देशित आकाश, राजन खरेल निर्देशित हयर एम आई र डब्बु क्षत्री निर्देशित सिगरेट रहेको छ । यी मध्य रेड, सिगरेट र हयर एम आई अप्रतियोगी चलचित्र हुन् ।

महोत्सवमा फाइनलको लागि प्राप्त वृत्तचित्र मध्य ४ वटा नेपाली वृत्तचित्र तथा बृत्तचलचित्र अन्तिम प्रतिस्पर्धाको लागि चयन भएका छन् । जसमा रामजी ज्ञवाली निर्देशित रित्तो गाउँ, अरुण कुमार प्रधान निर्देशित 'माता : लिभिङ गडेज' लव प्याकुरेल निर्देशित गर्ल्स रिवेरिङ र शिव पुरी निर्देशित डिफिनेटेड टु डिसापियर रहेका छन् ।

महोत्सवमा यस पटक प्राप्त २४ वटा सांगीतिक लघु चलचित्र मध्य पाँच वटा अन्तिम प्रतिस्पर्धाको लागि चयन भएका छन् । जसमा सोनाम पाखिन निर्देशित तिमी आँसु रहेछौ, हेमन्त शिशिर निर्देशित सँगै जुनी काटम्ला, देवेन्द्र कुँवर निर्देशित मायाले सजाउँला, जनक सिंह निर्देशित भुल्नै गारो भो, बबिता मगरको थिँक अवाउट यु र वीरेन्द्र भट विपिन निर्देशित जिन्दगी खेल जस्तै रहेको छ ।

यसै गरी आदिवासी जनजाति चलचित्रको प्रतिस्पर्धामा नेपाल अफ्रिका अन्तर्राष्ट्रिय चलचित्र महोत्सव २०२५को लागि फाइनलमा तीन वटा चलचित्र चयन भएका छन् । जसमा दर्शनवीर शाक्य निर्देशित नेपाल भाषाको लघु चलचित्र इन्द्रायणी, सागर केरुङ निर्देशित लिम्बु भाषाको चलचित्र के टु र आचार्य गोपाल निर्देशित मगर भाषाको चलचित्र अखत रहेका छन् ।

यस पटक स्टुडेन्ट चलचित्रको सूचीमा अन्तिम प्रतिस्पर्धाको लागि दुई विद्यार्थी चलचित्र चयन भएका छन् । जसमा कमला पौडेल र झरना साउद निर्देशित नो स्मोकिङ प्लिज र मोहन अभिलाषी निर्देशित स्कुल वाल रहेका छन् । महोत्सवमा चयन भएका चलचित्र, वृत्तचित्र, लघु चलचित्रबाट विभिन्न विधाको अवार्डको मनोनयन सूची पनि निर्णायक टिमले जारी गरेको छ ।

# प्रलिशा शाक्यले बनिन् "मिस नेवाः ११४५"

काठमाडौं । नेप्लीज फेसन होमले आयोजना गरेको 'नेपाल टेलिकम मिस नेवाः ११४५' को उपाधि ललितपुर महानगरपालिका-१६ की प्रलिशा शाक्यले जितेकी छिन् । कमलादीस्थित प्रभा भवनमा आयोजित एउटा भव्य समारोहमा आफ्ना १९ जना प्रतिस्पर्धिहरुलाई पछाडि पार्दै प्रलिशाले आकर्षक क्राउनसहित यो उपाधि जितेकी हुन् । 'मिस नेवाः ११४५' को उपाधिसहित प्रलिशाले नगद एक लाख रुपैयाँ तथा अन्य विभिन्न उपहारहरु प्राप्त गरिन् ।

नाथम कलेजबाट पर्यटन विषयमा स्नातक उत्तिर्ण गरेकी प्रलिशा अहिले नेपाल दर्शन कम्प्लिट टुरिजम प्रालिमा कार्यरत छिन् । सन्चारकर्मि मञ्जु बज्राचार्य तथा हस्तकला उद्यमी प्रदिप शाक्यकी सुपुत्री प्रलिशा पाँच फिट तीन ईन्च अग्ली छिन् । रोचक कुरा के छ भने नेप्लीज फेसन होमले नै सन् २०१३ मा आयोजना गरेको मिस लिटिल नेवाः ११३३ मा पनि प्रलिशा मुख्य उपाधि नै जितेकी थिइन् । प्रलिशा पछिल्लो एक दशकदेखि सञ्चार माध्यममा पनि आवद्ध छिन् भने झीगु सः नामक टिभि प्रोग्राम पनि सन्चालन गरीसकेकी छिन् । यो प्रतियोगितामा प्रलिशाले बेस्ट नेपाल भाषाको टाइटल अवार्डसमेत जित्न सफल भएकी छिन् । काठमाडौं उपत्यकाका विभिन्न नगरपालिका तथा जिल्लाबाट आएका २० जना प्रतिस्पर्धिहरुबीचको यो प्रतियोगितामा चन्द्रागिरी नगरपालिका, नैकापकी लूनिभा मानन्धरले फस्ट रनर्सअपको उपाधि जितिन् भने चमती, काठमाडौंकी लुमना महर्जनले थर्ड रनर्सअपको उपाधिमा जित्न सफल भइन् । उनीहरुले क्रमशः २५ हजार रुपैयाँ तथा १५ हजार रुपैयाँसहित विभिन्न उपहारहरु प्राप्त गरे ।

प्रतियोगिताका अन्य विजेताहरुतर्फ श्रद्धा महर्जनले मिस ट्यालेन्टका साथमा सोसल वेलफेयर सेकेण्ड रनर्सअपको उपाधि पनि जितिन् भने अनुश्री शाक्यले मिस ट्यालेन्ट फस्ट रनर्सअप तथा श्रीया मानन्धरले मिस ट्यालेन्ट सेकेण्ड रनर्सअपको उपाधि जितिन् । प्रतियोगितामा रोनिशा महर्जनले सोसल वेलफेयर एम्बासडर चिफको उपाधि जितिन् भने डिबिना डंगोलले सोसल वेलफेयर एम्बासडर फस्ट रनर्सअपको उपाधि जितिन् । प्रतियोगितामा प्रसिद्धि शाक्यले मिस डिसिप्लिनको उपाधि जितिन् भने अल्पा महर्जनले मिस पब्लिक च्वाइसको अवार्ड जितिन् ।

प्रतियोगिताका अन्य अवार्डहरुमध्ये प्राश्ना श्रेष्ठले बेस्ट ड्रेस, रितिशा बज्राचार्यले मिस कल्चर, संस्कृति श्रेष्ठले मिस कन्फिडेन्ट, सुभेक्षा श्रेष्ठले मिस पर्सनालिटी, रिम्षा श्रेष्ठले बेस्ट हेयर, रमुना बज्राचार्यले बेस्ट स्किन, कुन्ता श्रेष्ठले मिस फोटोजेनिक, अनुषा बज्राचार्यले बेस्ट स्माइल, शुवास्ना श्रेष्ठले मिस चार्मिङ तथा रुजी शाक्यले मिस फ्रेण्डशीपको उपाधि जित्न सफल भए ।

प्रतियोगितामा सरस्वती मल्टिपल क्याम्पसका प्रमुख दिव्या लक्ष्मी बज्राचार्य मुख्य निर्णायकको रुपमा रहेकी थिइन् । प्रतियोगितामा अधिवक्ता तथा माँ बगलामुखी कोअपरेटिभका अध्यक्ष लक्ष्मण महर्जन, लायन्स इन्टरनेश्नल क्लब ३२४एलका पूर्व डिस्ट्रिक्ट गभर्नर लायन मणि श्री बज्राचार्य, एलसीसीएल, ललितपुरका पूर्व अध्यक्ष अजर मान जोशी, नमूना कलेज अफ फेसन टेक्नोलोजीका उपप्रमुख जीवेश्वर लाल श्रेष्ठ, नेपाल लिपी गुठीका अध्यक्ष अनिल स्थापित, एसओ नेपालका अध्यक्ष डा.शिक्षिता श्रेष्ठ तथा मिस नेवाःनेपा ११३४ की विजेता एलिशा बज्राचार्य निर्णायकको रुपमा रहेका थिए ।

आयोजक नेप्लीज फेसन होमकी अध्यक्ष हेमा मानन्धरले मिस नेवाः ब्यूटी कन्टेस्ट मात्र नभएर नेवार समुदायको कला र संस्कृति सम्बर्द्धन एवं प्रवर्द्धन गर्ने अभियानसमेत रहेको र यस्तो अभियान नेवार समुदायमा मात्र नभएर हरेक समुदायमा हुनुपर्ने बताउँदै प्रतियोगिताले नेवारी कला र संस्कृतिलाई उजागर गर्ने प्रयास रहेको उल्लेख गरिन् । प्रतियागिताका सह-आयोजक फाइट फर लाइफ नेपालका उपाध्यक्ष दिल कुमार महर्जनले मिस नेवाः ११४५ भव्यतापूर्वक सफल भएको बताउँदै यसले नेवार समुदायका प्रतिभाशाली चेलीहरुको प्रतिभा, नेवारी कला, संस्कृति तथा भाषालाई उजागर गर्न सफल भएको बताएका छन् ।

रोजिन शाक्यको उद्घोषण तथा कोरियोग्राफीमा आयोजित प्रतियोगितामा राजु नापित नेपाल भाषा तथा लिपी प्रशिक्षकको रुपमा रहेका थिए । मिस नेवाः ११४१ की विजेता कृषा महर्जनको मुख्य संयोजनमा सम्पन्न भएको यो प्रतियोगितामा मिस नेवाः ११४३ की विजेता सकिना मजर्हन तथा सोसल वेलफेयर एम्बासडर चिफ ११४३ तिमिला महर्जन संयोजकको रुपमा रहेका थिए ।

प्रोफेसर डाक्टर बिमला शाक्यको सभापतित्वमा आयोजना गरिएको यो प्रतियोगितामा पूर्व मन्त्री पशुपति शमसेर जबरा प्रमुख अतिथिको रुपमा रहेका थिए । समारोहमा विशेष अतिथिहरु उप्रेती समाज सेवा समितिका अध्यक्ष सोबित उप्रेती तथा वरिष्ठ कलाकार मदनदास श्रेष्ठलाई नगद ५० हजार रुपैयाँसहित लाइफ टाइम एचिभ्मेन्ट अवार्डद्वारा सम्मानित गरिएको थियो ।

समारोहमा नमूना कलेज अफ फेसन टेक्नोलोजीका फाउन्डर/प्रिन्सिफल ज्ञानी शोभा तुलाधर, चन्द्रागिरी नगरपालिकाका प्रमुख घनश्याम गिरी, ललितपुर महानगरपालिका-१६ का वडाध्यक्ष निर्मल रत्न शाक्य, काठमाडौं महानगरपालिका वडा नम्बर २९ का वडाध्यक्ष कुश ढकाल, काठमाडौं महानगरपालिका वडा नम्बर-१८ का वडाध्यक्ष नुच्छेकाजी महर्जन, चन्द्रागिरी नगरपालिका वडा नम्बर ५ का वडाध्यक्ष राजेन्द्र महर्जन, डिस्ट्रिक्ट गभर्नर ३२५के निरा बज्राचार्य विशेष अतिथिको रुपमा रहेका थिए ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक




वर्ष १८ | अङ्क २६ | ने.सं. ११४५ सिल्लागा त्रयोदशी | फागुन १४ गते बुधबार, २०८१ | 26 Feb. 2025, Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## साना ठूला सबै कम्युनिष्ट पार्टीको मिसन ०८४ को निर्वाचन



काठमाडौं। नेपालको कम्युनिस्ट आन्दोलनमा आम जनताहरुको ठूलै आकर्षण रहेको छ। नेपालको हरेक जसो निर्वाचनको परिणामले पनि नेपालमा कम्युनिष्टहरुको जनमत ठूलै रहेको देखाएको छ। तर विडम्वना नै मान्नु पर्दछ। देशमा अहिलेसम्म कम्युनिष्टहरु एउटै पार्टीमा गोलबन्द हुन भने सकिएको देखिन्न। यस अघि भएको निर्वाचनमा नेकपा एमाले र नेकपा माओवादी केन्द्रको एकता पछि बनेको नेपाल कम्यसनिष्ट पार्टीले संसदमा दुइ तिहाइ बहुमत सहित सरकार गठन गर्ने अवसर पाएको थियो, तर त्यो एकता कायम हुन सकेन। अन्तत दोस्रो पटक भएको विर्वाचनमा कम्युनिष्ट पार्टीहरुको सिट संख्या घटेको छ। तर समग्रमा संसदमा अहिले पनि कम्युनिष्ट पार्टीहरुकै बहुमत सिट संख्या रहेको छ। यसरी नेपालमा कम्युनिस्ट पार्टीको स्थापना भएको ७६ वर्ष हुँदा यो नामका १९ वटा पार्टी अहिले अस्तित्वमा छन्।

कम्युनिस्ट आन्दोलन अगाडि बढाउन सबै एक भएर जानुपर्ने हो। किनकी सबै पार्टीको लक्ष्य समाजवाद हो। साथै आम जनता जो राज्यसत्ताबाट दवाइएकाहरुको हक हितमा आवाज उठाउने र तिनकै उत्थानमा लागेको दावी गर्ने पार्टी हो। तर, जुँगाको लडाइका कारण कम्युनिस्ट नामका पार्टी वर्सेनि फुटिरहेका छन्। फुटे पनि जनतामा जाने एजेन्डा भने सबैको एकै खाले रहने गरेको छ। यो वर्ष पनि नेकपा एमालेबाट छुट्टिएका डा.भीम रावलले पार्टी नखोली 'मातृभूमि जागरण अभियान' चलाइरहेका छन्। उनी अहिले देश दौडाहामा छन्। रावल देश दौडाहामा रहेका बेला सरकारको नेतृत्व गरिरहेको नेकपा एमाले पनि जरा अभियानको रुपमा गाउँ पस्दैछ। त्यसो त एमाले ०७९ को निर्वाचनपछि विभिन्न बहानामा गाउँ पसिरहेको छ।

यता प्रतिपक्षी नेकपा माओवादी केन्द्र, नेकपा एकीकृत समाजवादी पनि गाउँ जाँदैछन्। मोहन वैद्य नेतृत्वको कान्तिकारी कम्युनिस्ट पार्टी, डा. बाबुराम भट्टराईको नेपाल समाजवादी (नयाँ शक्ति), नारायणमान बिजुक्छें नेतृत्वको नेपाल मजदुर किसान पार्टी, नेत्रविक्रम चन्द 'विप्लव' नेतृत्वको नेकपा पनि जनतामाझ गइरहेका छन्। यी सबैको उद्देश्य ०८४ मा हुने निर्वाचनलक्षित रहेको छ। अहिले संघीय संसदमा कुनै पनि पार्टीको बहुमत छैन। सरकार पनि गठवन्धन गरेर निर्माण भएको छ।

नेपालमा ०४८ यता कम्युनिस्ट नेताहरू बारम्बार सरकारमा गइरहेका छन्। कम्युनिस्ट पार्टीबाटै छ जना प्रधानमन्त्री र एकजना राष्ट्रपति भइसकेका छन्। राजतन्त्र ढलेर गणतन्त्र आउँदा पनि कम्युनिस्टले भन्दै आएको सामाजिक न्यायको महसुस जनताले गर्न सकेको छैन। सुशासन, स्थायित्व र दिगो विकासको एजेण्डा नारामै सीमित रहेको छ। कम्युनिस्ट पार्टी स्थापनाको ७६ वर्षमा मनमोहन अधिकारी, माधवकुमार नेपाल, झलनाथ खनाल, पुष्पकमल दाहाल प्रचण्ड, डा.बाबुराम भट्टराई र केपी शर्मा ओली प्रधानमन्त्री बनिसकेका छन्।

कम्युनिस्ट पार्टीबाटै विद्या भण्डारी दुई पटक राष्ट्रपति बनिन्। तर, कम्युनिस्टहरू बारम्बार सरकारमा हुँदा पनि जनताले पुँजीवादीकै जस्तो स्थिति भोग्नुपरिरहेको छ। जनताले दुःख

बाँकी पेज ७ मा

## प्रेस सेन्टरको उपत्यका प्रदेशमा लिम्बुको अध्यक्षतामा नयाँ नेतृत्व



काठमाडौं। प्रेस सेन्टर नेपालको उपत्यका प्रदेश अध्यक्षमा लोकेश लिम्बु निर्वाचित भएका छन्। गत शनीबार काठमाडौंको बिजुली बजारस्थित क्रिष्टल ब्याङ्क्वेटमा सम्पन्न दोस्रो अधिवेशनबाट लिम्बुको अध्यक्षता २३ सदस्यीय नयाँ कार्यसमिति चयन भएको हो।

समितिको उपाध्यक्षमा बुद्ध योन्जन, समावेशी उपाध्यक्षमा श्याम तण्डुकार र महिला उपाध्यक्षमा सरिता थापा निर्वाचित भएका छन्। महासचिवमा भने रोशन क्षेत्री गाउँले निर्वाचित भएका निर्वाचन अधिकृत उत्तम श्रेष्ठले जनाएका छन्।

त्यस्तै खुला तर्फ सचिवमा सुवास शर्मा र भिमराज खड्का, जनजाति तर्फ सचिवमा बाबुकाजी श्रेष्ठ, महिला सचिवमा शारदा घिमिरे र दलित सचिवमा बिक्रम रत्न निर्वाचित भएका उनले बताए। कार्यसमितिको कोषाध्यक्षमा कुबेर दाहाल निर्वाचित भएका बताइएको छ।

त्यसैगरी सदस्यहरुमा भने नुराज कँडेल, सूर्य खड्का, शम्भु प्रसाद दंगाल, कृष्ण अधिकारी, शिवबिक्रम शाह, सुरेश झ्या श्रेष्ठ, विवेक गुरुङ, रमिला योन्जन, अप्सरा सिग्देल, नारायण लिंखा

बाँकी पेज ७ मा

## नेपालका स्वार्थ समूहको चङ्गुलमा पर्दा इल्गा सम्मेलन विवादित




काठमाडौं : नेपालमा सुरु समलिङ्गी महिला, समलिङ्गी पुरुषहरूको अन्तर्राष्ट्रिय सङ्गठन इल्गा एसियाको १० औं सम्मेलन विवादित बनेको छ। नेपालबाट इल्गा एसियाको सदस्य रहेकै संस्थालाई सुरुमा आमन्त्रण गरेर सहभागिता सुनिश्चित गरेको इल्गा एसियाले सम्मेलन सुरु हुँदा वञ्चित गराएको छ।

इल्गा एसियाले स्थानीय आयोजक रहेको ब्लु डायमन्ड सोसाइटी बाहेकका संस्थाहरूबाट दुई/दुई जना सहभागी हुन निमन्त्रणा पठाएको थियो। सम्मेलनको ठेकेदार बनेको ब्लु डायमन्डले नेपालबाट सहभागी

बाँकी पेज ७ मा

## शनिबारसम्म आठ दिने स्वयम्भू महोत्सव हुने



काठमाडौं। काठमाडौं महानगरपालिका वडा १५ को आयोजनामा गत फागुन १० गते शनिबारदेखि १७ गते शनिबारसम्म आठ दिने स्वयम्भू महोत्सव शुरु भएको छ।

काठमाडौं महानगरपालिका वडा नं. १५ का वडाध्यक्ष इश्वरमान डंगोलले वडाको भौगोलिक अवस्थिति, धार्मिक, सांस्कृतिक तथा सामाजिक रीतिथिति र परम्परा, मठ मन्दिर, चैत्य, गुम्बासहितका प्राचीन स्मारकजस्ता विविधतायुक्त विशेषतालाई पहिचानका रुपमा स्थापित गर्न महोत्सवको आयोजना गर्न लागेको कुरा गत बिहिवार स्वयम्भुको भगवान पाउ स्थित उक पत्रकार भेटघाटको आयोजना गर्दै जानकारी दिएका थिएण।

'सबैले मेरो महोत्सव हो भन्न सक्ने, सद्भावयुक्त पहिचानको प्रवर्धन गर्न महोत्सव आयोजना गर्न लागिएको हो। यो पहिचानले वडासँगै वडाबासी व्यक्ति, समुदाय, निजी तथा सामाजिक क्षेत्र सबैको दिगो रुपमा आर्थिक तथा सामाजिक विकास हुन सकोस् भन्ने हाम्रो अभिप्राय रहेको छ,' उनले भने।

महोत्सवमा करिब ६० वटा स्टलहरु रहने र प्रदर्शनीमा घरेलु तथा साना उद्योगबाट उत्पादित बस्तुहरुको बजार व्यवस्थापनका लागि प्राथमिकता दिइने पनि उक्त कार्यक्रममा जानकारी गराए। साथै नेवाहरुको बाहुल्यता रहेको यस क्षेत्रमा नेवा कला, संस्कृति र सम्पदाहरुको बारेमा प्रचार प्रसार गर्ने र सो सम्वन्धी सेवा प्रदान गर्ने योजना रहेको उनले बताए। प्रदर्शनीमा परम्परागत बाजा, नेवा समुदायका जन्मदेखि मृत्यु पर्यन्तका संस्कारसँग सम्बन्धित चित्र, संस्कृति र परम्परासँग सम्बन्धित चित्र, वुद्धको जीवनीसँग सम्बन्धित चित्र, हुलाक टिकट र मुद्रा संकलनको प्रदर्शनी लगायतका स्टल रहने पनि जानकारी गराए।

वडाबासीले उत्पादन गरेका मौलिक सामान तथा बस्तु प्रदर्शन, नेवाका मौलिक खानाका स्टल, स्वास्थ्य परीक्षण, रक्तदानलगायत सेवा हुनेछन्। रञ्जना लिपि लेखन, मुहार चित्रकारिता (फेस पेन्टिङ) जस्ता क्रियाकलाप महोत्सवका आकर्षण हुनेछन्।

'पूर्खाको पौरख, नेपाली गौरव' नारासहित आयोजना हुने महोत्सवमा सांस्कृतिक तथा मनोरञ्जनात्मक कार्यक्रम र खेलहरु समावेश गरिनेछ।

बाँकी पेज ७ मा

## मातृभाषा दिवसले जगाएको आशा

● गणेश राई

नेपालको संविधान (२०७२) को धारा-६ मा 'नेपालमा बोलिने सबै मातृभाषाहरू राष्ट्रभाषा हुन्।' धारा-७ (१) मा 'देवनागरी लिपिमा लेखिने नेपाली भाषा नेपालको सरकारी कामकाजको भाषा हुनेछ। (२) नेपाली भाषाका अतिरिक्त प्रदेशले आफ्नो प्रदेशभित्र बहुसंख्यक जनताले बोल्ने एक वा एकभन्दा बढी अन्य राष्ट्रभाषालाई प्रदेश कानुनबमोजिम प्रदेशको सरकारी कामकाजको भाषा निर्धारण गर्न सक्नेछ। (३) भाषा सम्बन्धी अन्य कुरा भाषा आयोगको सिफारिसमा नेपाल सरकारले निर्णय गरेबमोजिम हुनेछ।' उल्लेख छ। राष्ट्रिय जनगणना २०७८ को तथ्यांकअनुसार मुलुकमा १४२ जातजाति छन भने १२४ भाषा बोलिन्छन्।

### जाग्दै लोपोन्मुख दुरा भाषा

नेपालका भाषावैज्ञानिक तथा अनुसन्धाताले पत्तालगाए कि दुरा जाति छन् तर भाषा छैन। छिमेकमा रहेका मुक्तिनाथ घिमिरेमात्र दुरा भाषा जान्छन्। उनैले दुरा भाषा बोल्न, लेख्न, अध्ययन अनुसन्धान गर्दै आएका छन्। उनले जानेका बोलीचाली संकलन गरेर फेरि दुरा समुदायलाई सिकाउन सकिन्छ भनेर सुझाव दिए। तथ्यांकले दुरा भाषा बोल्नेको जनसंख्या १९९१ जना देखाएको छ। तर त्यो मातृभाषा बोल्न जान्नेको संख्या होइन।

### अभिलेखन हुँदै लोपोन्मुख कुसुन्डा भाषा

यसैगरी भाषावैज्ञानिकले कुसुन्डा जाति छन् तर दुरा भाषा बोल्न जान्ने दुई जना दिदीबहिनीमात्र छन्। ज्ञानीमैया कुसुन्डा र कमला खत्री छन्। तिनै दुईजनाले जाने जति कुसुन्डा भाषा अध्ययन अनुसन्धान गरेमात्र भाषा अझैं बचाउन सकिन्छ भन्ने अभिमत जाहेर गरे। सँगसँगै भाषाविज्ञान रुचि राखेर अध्ययन अनुसन्धानमा लागेका आफ्नो विद्यार्थीलाई लोपोन्मुख भाषाको अध्ययन अनुसन्धान तथा अभिलेखीकरण गर्न बाटो देखाए।

त्रिभुवन विश्वविद्यालय भाषाविज्ञान केन्द्रीय विभागअन्तर्गत यी दुई लोपोन्मुख भाषाको प्राज्ञिक अध्ययन, अनुसन्धान र अभिलेखीकरण कार्य हुँदैआएको छ। यसैगरी नेपाल सरकार मातहतमा आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, भाषा आयोग, नेपाल प्रज्ञा-प्रतिष्ठानलगायत निकायले लोपोन्मुख भाषाहरूको अभिलेखीकरणमा चासो देखाउँदै आएका छन्।

धनबहादुर कुसुन्डा भन्नुहुन्छ- भाषा आयोगले निरन्तर पाँचौं वर्षसम्म कुसुन्डा भाषाको प्रशिक्षण कक्षा संचालन गरेपछि मातृभाषाप्रति आशा जागेको छ। केटाकेटीले आपसमा बोल्न र बुझ्न सक्ने भएका छन्। सबै एकै ठाउँ बस्न पाए, बोलीचाली निरन्तर हुन्थ्यो। थोरै जनसंख्या, टाढा टाढा बसाइले गर्दा अनेक समस्याहरूले चुनौतीपूर्ण छ। शब्दकोश, पाठ्यसामग्रीहरू छापिएका छन्।

कुसुन्डा भाषाका अध्यता

बाँकी पेज ७ मा

थिमि TIMES

# जलवायु परिवर्तनले पारेको सकस, दिनदिनै गाउँ रित्तिँदै

● कुमार यात्रु तामाङ

रामेछापको उमाकुण्ड प्रितिमा आयोजित साहित्यिक कार्यशालामा भूजीबाट आएकी एक विद्यार्थीले आफनो सुरिलो भाकामा गीत गुनगुनाईन् ।

उँधो बग्ने लिखु खोला, माथि बग्ने हावा,
हातमा रुमाल काँधमा झोला, बसाई सर्ने धावा ॥

ठ्याक्कै ! यही गीतमा भनिए झैं रामेछाप सहितको ओल्लो किरात क्षेत्रमा बसोबास गर्नेहरुको धावा बसाइ सर्नेकै छ ।

उमाकुण्ड-२ बाम्ती बजारबाट सोतर्मु झर्दै गर्दा कुँबुकास्थलीका बीरेन सुनुवार झोला कुटुरो बोकेर बाम्तीतिर उक्लिदै थिए ।

हतारोकै बीचमा उनले गाउँ छाडेर रोजगारीका लागि शहर हिडेको भन्न भ्याए ।

'गाउँमा केही छैन, गरी खान नसकिने भयो ।' दिक्दारीका साथ उनले गाउँ छाड्नु पर्ने कारण छोटोमा बताए ।

सामन्यतः बीरेन्द्रले भोगेको पीडा रामेछाप उमाकुण्डबासीहरुले प्रत्यक्ष भोगी रहेका छन् । स्थानीय भरत सुनुवारका अनुसार गाउँ छाडेर शहर पस्नेहरुको लर्को पछिल्लो २/३ बर्ष देखि बढेको छ ।

यो सबै जलवायु परिवर्तनको प्रभाव हो, जलवायु परिवर्तनले कृषिमा प्रभाव पारे पछि स्थानीयहरु जिविकाका लागि शहर पस्नुको विकल्प रहेन । पूर्व शिक्षक समेत रहेका भरतले सुनाए -'परम्परागत कृषि हरायो, आधुनिक कृषिले माटो सबै विगाऱ्यो। विकल्पको खोजीमा युवाजति शहर र वैदेशिक रोजगारीको बिाटो रोज्न बाध्य बनाएको छ ।'

यस्तो सकस मूलभूत रुपमा ओल्लो किरातका आदिवासी सुनुवारमा बढी परेको छ । सुनुवारहरुको जातीय संस्था सुनुवार सेवा समाजका संघीय सचिव समेत रहेका रमेश सुनुवारको अनुभवमा लिखु र खिम्ती आसपासको क्षेत्र आदिवासी सुनुवारको प्रथाजन्य भूमि भए पनि अहिले सुनुवारहरुको उपस्थिति पातलो छ ।

उमाकुण्ड गाउँपालिका कार्यलयका पञ्जिका शाखाका कर्मचारी रुकमान सुनुवारले पछिल्लो समयमा बसाइसरेर जानेको संख्या बढेको बताए । 'लाहुर जाने परम्परा त सुनुवार समाजमा थिँदै थियो, पछिल्लो समयमा रोजगारीका लागि खाडी मुलुक जानेको संख्या ह्वात्तै बढेको छ । परिणामतः गाउँ रित्तो जस्तै भएको छ ।' रुकमानले बताए ।

पालिकाका प्रमूख प्रशासकीय अधिकृत अभिनय अधिकारी पनि बसाईसर्नेको संख्या बढेको जानकारी दिए । खासगरेर उपत्यकाको भक्तपुरमा स्थायी बसाई सरेर जानेको संख्या धेरै रहेको उनको दावी छ । तर, के कारणले बसाई सरेका हुन् भनेर अनुसन्धान भने हुन नसकेको अधिकारीको भनाइ छ ।

परम्परागत कृषिमा गहिरो असर

प्रिति उमाकुण्डकी कविता सुनुवार जलवायु परिवर्तनका कारण कृषि क्षेत्रमा गहन प्रभाव परेको र यसका कारण बसाई सराई बढेको दावी गर्छिन् ।

'यहाँका (उमाकुण्ड)का आदिवासी किरात सुनुवार कोँइचहरुको परम्परागत पेसा कृषि र पशुपालन हो । जलवायु परिवर्तनका कारण अनियमित बर्षा, बाढी, खडेरी र हिमपातले कृषि उत्पादनमा गिरावट आएको छ ।'' कविताले यसैमा थपिन -'हाम्रो परम्परागत बाली कागुनो, घैया जस्ता बालीहरु हुनै छाडे, कोदो फापर र मकै पनि कसै कसैले लगाउँछन् । मीठे फापरको बिउ नै लोप भइसकेको छ ।'

बर्षभरी खेती गर्दा पनि खान नपुग्ने र मेहनत पनि नउठ्ने भए पछि खाद्य सुरक्षामा गम्भीर समस्या भोगेका कारण स्थानीय सुनुवारहरु आफनो थातथलो छाड्न बाध्य भएको कविताको विश्लेषण छ ।

स्थानीय च्यादलु निवासी अनुदेवी सुनुवार भने पानीका मुहान सुक्नु नै बसाई सराईको प्रमूख कारण रहेको बताउँछिन् । प्रिति च्यादलु, बाम्ती भुजी, कुँबु, कास्थली, गुम्देल, गुप्तेश्वरजस्ता स्थानमा पानीका मुहानहरु सबै सुकेका छन् । मुहान सुकेबाट खेती बालीका लागि सिचाई र मानिस तथा पशुका लागि पिउनेपानीको समस्या परेको सुनाउँछिन् ।

नगिचै रहेको गौरीशंकर हिमाल र नुम्बर हिमालमा हिउँ पग्लिने दर बढ्दा त्यस क्षेत्रका नदी र खोल्साहरूको पानी प्रवाह अस्थिर हुँदै गएको स्थानीयको भनाई छ । जमिनमुनिको पानीकोस्तर घट्दा खानेपानीको समस्या देखा पर्ने गरेको अनुसन्धानहरुमा उल्लेख छ ।

पानीको अभावले प्राणी बाँच्न सक्दैन, पानीसंगै खाद्य सुरक्षामा समस्या भएको अनुदेवीको अनुमान छ । भन्छिन् - 'हामीलाई पानी मात्र होइन, जीवन बाच्ने आधारहरु पनि खोसिएका छन् । जंगली खाद्यस्रोतहरु कम भएका छन् । जडिबुटी पाउन छोडेको छ । सुनुवारहरु बसाई सर्नूको प्रमूख कारण यही हो ।'

मासिए परम्पराहरु

ओल्लो किरात भनिइने सुनुवार आदिवासीको प्रथाजन्य भूमि लिखु, सुनकोशी तथा खिम्ती नदी आसपासमा बसोबास गर्ने आदिवासी सुनुवरहरुको परम्परगात पेसा, व्यबसायसंगै साँस्कृतिक प्रथा र परम्पराहरु मासिएकोमा स्थानीयको चिन्ता छ । उमाकुण्ड गाउँपालिका वडा नम्बर ४ स्थित च्यादलीकी सुनिता सुनुवारको भनाइमा सुनुवारहरुको प्रथाजन्य स्वशासन प्रणाली कोँइच चुप्लुको परम्परा माथि नै आघात पुगेको छ ।

'सुनुवारहरुको परम्परा अनुसार पोइम ग्यामी, न्हासोहरुबाट स्यादर पीदार गर्ने परम्परा भए पनि त्यसका लागि सामाग्रीको अभाव तथा जनशक्तिको पनि कमीले यस्ता प्रथाहरु मासिन लागेको छ ।' सुनिताले यसैमा थपिन- 'सुनुवारहरुको क्षेत्रमा ११ वडा जलविद्युत आयोजना सञ्चालनमा छन् । ती जलविद्युतका कारण सुनुवारहरुको हरेक पीदारमा आवश्यक पर्ने तीते माछा (नेङ माछा) मासिएका छन् ।'

'सुनुवारहरुको परम्परामा होपो तथा मुलिचः जस्ता सामाजिक अगुवाहरु थिए, ती सबै अस्तित्वविहिन भएका छन् ।' सुनिताको थप स्पस्टिकरण छ ।

जलवायु परिवर्तनको प्रभाव न्युनिकरणका लागि वन जंगल जोगाउने तथा वातावरण स्वच्छ राख्ने केही परम्पराहरु पनि अभ्यासमा छन् । सुनुवार सेवा समाजका सचिव रमेश सुनुवार थप्छन् -'सुनुवारहरुको था रो क्यु वा नामक प्रथा रहेको छ । जस्ले खर्क, विरुवा तथा जडिबुटी र बन्य जन्तुको संरक्षण गर्न पुर्खाहरुले अभ्यास गरेका हुन् । तर तथाकथित आधुनिकताका नाममा यस्ता परम्पराहरु नास भएका छन् ।'

'हाम्रा पुर्खाले सफा-फुल्लु क्युःबा नामक प्रथा चलाएका थिए, यो प्रथामा साँध किल्ला छुट्याउने प्रथाजन्य विधि हो । यो प्रथामा साँधमा सेउली र ढुंगा झुन्ड्याएर सीमाना लगाइन्थ्यो । यो सीमाना उल्लघन गर्न पाइन्न थियो । तर अहिले यो प्रथा पनि सकिएको छ ।' रमेश सुनुवारले बताए ।

सुनुवार परम्परा प्रकृतिमैत्री रहेको स्थानीय भरत सुनुवारले जानकारी दिए । उनका अनुसार सुनुवारहरुमा 'जिलो नमास्ने विलो बाड्ने प्रथा' रहेको छ । जस्लाई सुनुवार कोँइच भाषामा 'ङर पुम्चा, थेःरचा योअचा' भनिन्छ । यस अन्तर्गत प्रथाजनित संस्था कोँइच चुप्लुले कन्दमूल खन्दा जिलो मास्न नहुने गरी विउ त्यही छाड्ने थिति बसालेका थिए ।

भरतले यही सन्दर्भमा थपे -'बाँस तथा निगालोको टुसा काट्न नहुने, माछाको शिकार गर्दा भूरा माछा नखाने, शिकार गर्दा गर्भिणी पोथीको शिकार नगर्ने, भीरमौरी काट्दा मौरीको घार नभत्काउने जस्ता नियम छन् ।'

आदिवासी सुनुवारहरुको परम्परागत कृषि प्रणाली, पशुपालन, प्राकृतिक स्रोतको व्यबस्थापन लगायतका आदिवासीय परम्परागत ज्ञान माथि जलवायु परिवर्तनले प्रत्यक्ष असर पारेको पाइन्छ ।

उनीहरुको जीवनशैलीमा आएको परिवर्तनले चाँडपर्ब र धार्मिक अनुष्ठानमा समेत प्रभाव पारेको छ । जलवायु परिवर्तनका कारण स्वास्थ्यमा नकारात्मक असर र आर्थिक स्रोतहरुमा पनि कमी आएको छ ।

सुनुवारहरु बाँस तथा निगालोको डोको, नाम्लो, थुन्छे, डालो लगायत बाँसजन्य सामाग्री बनाउन खप्पीस छन् । रस्नालुका बीर बहादुर सुनुवारका अनुसार यस्तो सीप जानेका अब केवल छजना मात्र बाँकी छन् ।

आदिवासी सुनवराहरु परम्परागत भूमि भूभाग, तथा त्यसमा उपलब्ध स्रोतमा पहुँच घट्दै गए पछि यस्ता प्रथा परम्पराका असल अभ्यास पनि मासिएका हुन् । यसबाट आदिवासी सुनुवारहरु सबैभन्दा बढी पीडित बनेका छन् भने सुनुवार भित्र पनि महिला तथा अपांगता भएका व्यक्तिहरु पहिचानविहिन बन्दै गएका छन् ।

यी समग्र बिषयमा स्थानीय उमाकुण्ड गाउँपालिकाले अध्ययन गरिरहेको गाउँपालिकाकी उपाध्यक्ष सावित्री सुनवारको भनाइ छ । हामीले जलवायु परिवर्तनमा केन्द्रीत रहेर बजेट तथा नीति कार्यक्रम नबनाए पनि जलवायुमैत्री योजना बनाउन सुरु गरेको छौ , उपाध्यक्ष सावित्रीले बताइन् । उनले जानकारी दिए अनुसार पालिकाले स्थानीय बन ऐन ल्याएर यहाँका सुनुवारहरुको पहिचानलाई मान्यता दिइएको छ ।

उमाकुण्ड गाउँपालिकाका प्रमूख प्रशासकीय अधिकृत अभिनय अधिकारी पनि जलवायु परिवर्तनको प्रभाव न्युनिकरण गर्न संघ र प्रदेशले बिशिष भूमिका निर्वाह गर्नू पर्ने बताए ।

गाउँमा के छैन ?

गाउँमा के छैन ? सबै थोक छ । सडक पुगेको छ । हरेक दिन दर्जन भन्दा बढी सार्वजनिक भाडाको सुमो गाडी चल्ने गर्छ । लिखु बगरको किन्जासम्म त बस नै जान थालेको छ । बोर्डिङ स्कूल टोलै पिच्छे खोलिएको छ । गाउँको छेउमा नै भए पनि सोतर्मूमा अस्पताल बन्दैछ । हृल्थपोष्टहरु सिअहेवले भए पनि चलाएकै छन् । गाउँ गाउँमा सिंहदरबाररुपी स्थानीय तहका वडा कार्यलयहरु छन् । प्रहरी प्रशासन छ । सबै थोक छ ।

गाउँमा टेलिभिजन पुगेको छ । डिस्क होमले छिन छिनको खबर प्रसारण गर्ने टेलिभिजन पुऱ्याएकै छ । हात हातमा सके सामसुङको मोवाइल, नसके नोकियाको भए पनि मोवाइल छ ।

# विरोधको बिच वडा कार्यालय भवन शिलान्यास

मध्यपुर थिमि । विवादका बाबजुद भक्तपुरको मध्यपर थिमि नगरपालिका वडा नं २ को वडा कार्यालय भवनको शुक्रबार मध्यपर थिमिमा एक कार्यक्रमवीच शिलान्यास गरिएको छ । मध्यपर थिमि नगरपालिकाका प्रमख सुरेन्द्र श्रेष्ठले एक समारोहवीच वडा कार्यालय भबनको शिलान्यास गरेका हन् ।

आफनो जग्गामा वलजफ्ती वडा कार्यालय भबन बनाउन लागिएको आरोप पीडितहरुले कार्यक्रमस्थलमै पुगेर गरेका थिए । आफना पीडा सुनाउन समूहमै पीडितहरु शिलान्यासस्थलमा पुगेका थिए ।

पीडित राम बाडेले आफनो तीन रोपनी क्षेत्रफलमध्येको जग्गामा वडा कार्यालय भबन शिलान्यास गरेको भन्दै आपति जनाए । तर नगरपालिकाले भने दिव्यश्वरी जग्गा एकीकरण आयोजनाले दिएको जग्गामा वडा कार्यालय बनाउन लागेको दावी जनायो । तर पीडित पक्षले आफूहरुको जग्गा दिव्यश्वरी जग्गा एकीकरण आयोजना बाहिर रहेको जनाए ।

पीडित राम बाडेले दिव्येश्वरी ९ (क) किता नं २२९ को जग्गा आफूहरुको जग्गा रहेको जानकारी गतवर्षको २०८० माघ २५ गते नै जानकारी वडा कार्यालयलाई गराइसकेको पत्र देखाउँदै जानकारी हुँदाहुँदै पनि भूमाफीयाको चंगुलमा फसेर जवरजस्ती शिलान्यास गरिएको आरोप लगाए । 'फागुन ८ गते विहीबार (हिजो) मात्रै पनि हामीले यही व्यवहोराको पत्र वडा कार्यालयलाई बुझाएका थियौं, पत्र देखाउँदै पीडित बाडेले भने, यो पत्र नगरपालिकाको कार्यालयमा पनि दर्ता गर्न गएका थियौं, तर दर्ता नै गर्न मानेन ।

आफूले नगरप्रमुख सुरेन्द्र श्रेष्ठलाई पनि मौखिक जानकारी गराइसकेको र प्रमखले यस सम्वन्धमा सल्लाह गरी अगाडि वढ्ने आश्वासन आफूलाई दिएको उनले जनाए । आफनो जग्गामा बनेको वडा भबन अन्ततः आफनै कायम रहने र यसले प्रमुख, उपप्रमुख, वडाअध्यक्ष सवैलाई नकारात्मक असर पर्ने दावी उनले गरे । उनले यस विषयमा सहयोगका लागि सरोकारवाला अख्तियार, प्रहरी, प्रशाशन, मालपोत, काठमाडौं उपत्यका विकास प्राधीकरणलगायतलाई जानकारी दिइसकेको जानकारी गराए ।

नवनिर्मित वडा कार्यालय पुरानो थिमिको सडकमै रहेको छ । एसओएस स्कुलतर्फ स्कुलको करिव दई सय मिटर पश्चिममा सडक छेउमै वडा कार्यालय भबनको शिलान्यास गरिएको हो ।

भबन साढे चार तल्लाको बन्ने बताइएको छ । चारमध्ये दई माथिल्लो तल्ला अर्थात् तेश्रो र चौथौ तल्ला वडा कार्यालय र बाँकी पहिलो र दोश्रो तल्ला भाडामा दिने जनाइएको छ ।

करिव २० आनाको जग्गामा भबन बन्ने जनाइएको छ । कुल क्षेत्रफलमध्ये आधा क्षेत्रफलमा भबन बन्ने बताइएको छ । भबन पार्किंगसहितको हुने जनाइएको छ ।

भबनको कुल लागत १० करोड रहेको जनाइएको छ । तर ठेक्कामार्फत् टेण्डरमा ६ करोडमा बनाइदिने कवोल पास भएकाले ६ करोड खर्चमा साढे चार तल्ले भबन बन्ने बताइयो । वडा कार्यालय भबन बनाउन लाग्ने सम्पूर्ण रकम नगरपालिकाकाले व्यहोर्ने जनाइयो ।

कार्यक्रममा नगर प्रमुख श्रेष्ठ, उपप्रमुख विजयकृष्ण श्रेष्ठ, वडा न २ का वडा अध्यक्ष श्रीकृष्ण श्रेष्ठ, ३ का वडा अध्यक्ष एवं नगर प्रवक्ता कृष्णहरि आचार्यलगायतको उपस्थिति रहेको थियो । शिलान्यास कार्यक्रम शिलान्यास मात्रै गरेर अन्य कुनै औपचारिक कार्यक्रम नगरी सम्पन्न गरिएको थियो ।

# विश्वशान्तिको लागि बुद्धशिक्षा आवश्यक : धम्मशोभन

काठमाडौं । बौद्ध विद्वानद्वय रत्नसुन्दर शाक्य र ठाकुर कृष्ण उप्रेतीका दुईवटा पुस्तक संयुक्त रुपमा लोकार्पण गरिएको छ । स्रष्टा शाक्यले रचना गर्नुभएको बौद्धजगतका स्मरणीय व्यक्ति तथा उप्रेतीले अंग्रेजी भाषाबाट नेपालीमा अनुवाद गर्नुभएको व्यवहारिक विपश्यना ध्यान नामक पुस्तक लोकार्पण गरिएको हो । धापाखेल बौद्ध बिहारमा सम्पन्न भएको पाँचौं धम्म डिजिटल दिवसको सन्दर्भमा पुस्तक लोकार्पण गरिएको हो ।

शाक्यले नेपालको लुम्बिनीमा जन्मिनुभएका सिद्धार्थ बुद्धको दर्शन, ध्यान, पञ्चशील तथा समग्रमा बुद्ध धर्म प्रचार गरेका विश्वभरका ३० जना विद्वानहरुको व्यक्तित्व उल्लेख गरी पुस्तक रचना गर्नुभएको छ । विक्रम संवत् २०४८ सालदेखि पुस्तक प्रकाशन सुरु गर्नुभएका स्रष्टा शाक्यले यसअघि ४४ वटा पुस्तक प्रकाशन गर्नुभएको छ । अर्का स्रष्टा उप्रेतीले सतिपट्ठान विपश्यनाचार्य अग्गमहापण्डित महासी सयादोले पाली भाषामा रचना गर्नुभएको पुस्तकलाई अंग्रेजीबाट नेपाली भाषामा अनुवाद गर्नुभएको छ । उहाँहरुको पुस्तकलाई अखिल नेपाल भिक्षु महासंघका अध्यक्ष भिक्षु फ्राखु विशाल धम्मशोभन महास्थवीर, सचिव भिक्षु निग्रोध महास्थवीर, शासनधर धम्मचारिया भिक्षु ञाणाबुधस्थवीर, धम्म डिजिटलका अध्यक्ष भिक्षु जनक र ललितपुर महानगरपालिकाका प्रवक्ता राजु महर्जनले संयुक्त रुपमा लोकार्पण गर्नुभएको थियो ।

कार्यक्रममा लोकर्पण गरिएको पुस्तकको अन्तरवस्तुमा टिप्पणी गर्दै भिक्षु ञाणाबुधस्थवीर र परियत्ति सधम्म कोविध लोचनतारा तुलाधरले समीक्षा गर्नुभएको थियो । कार्यक्रममा मुख्य अतिथिको रुपमा सहभागी हुनुभएका अखिल नेपाल भिक्षु महासंघका अध्यक्ष भिक्षु फ्राखु विशाल धम्मशोभन महास्थवीरले पाली भामा लेखिएको बुद्ध धर्मको मुख्य ग्रन्थ त्रिपिटकले विश्व शान्तिको लागि सहयोग गरेको दाबी गर्नुभयो । कालान्तरमा त्रिपिटकलाई विभिन्न भाषामा अनुवाद गरिएको जानकारी दिंदै उहाँले मुख्य ग्रन्थबाट साभार गर्नसके वास्तविक धर्म, दर्शन, सिद्धान्त प्रचार हुने बताउनुभयो । बुद्ध शिक्षा व्यवहारिक भएको हुनाले पछिल्लो समय विश्वभर प्रचार भएको उहाँको दाबी छ । अहिलेको अवस्थामा बुद्ध शिक्षा अपरिहार्य रहेको जनाउँदै विश्वका विभिन्न देशमा भइरहेको युद्ध अन्त्य गर्न बुद्ध शिक्षाले सहयोग गर्ने उहाँको आसय रहेको छ । कार्यक्रममा बुद्ध सम्बन्धिका विभिन्न पुस्तक र ग्रन्थलाई डिजिटलाइजेसन गरिरहेको जानकारी दिंदै धम्म क्वीज एप्लिकेसन शुभारम्भ गरिएको थियो ।


TIMES

वर्ष १८ अङ्क २६ २०८१ फागुन १४ गते बुधबार
26 Feb. 2025, Wednesday



# विद्यार्थीहरुले गर्न थाले फोहरबाट आम्दानी



काठमाडौं । काठमाडौं महानगरपालिका वडा २२ न्यूरोडस्थित हिमालयन माध्यमिक विद्यालयका विद्यार्थीहरुले विद्यालयबाट उत्पादन भएको फोहर बेचेर आय आर्जन गर्न थालेका छन् । सामुदायिक विद्यालयमा महानगरपालिकाले कार्यान्वयन गरेको बुक फ्री फ्राइडे कार्यक्रमअन्तर्गत गठन गरिएको वातावरण र वालबालिका (वावा) उपसमूहका विद्यार्थीहरु विद्यालयको सरसफाइ गर्दा बटुलिएको फोहर वर्गीकरण गरेर बिक्री गर्न थालेका हुन् ।

शुक्रबार महानगरपालिकाकी उपप्रमुख सुनिता डंगोलले विद्यार्थीहरुको फोहर बिक्री गर्ने अभ्यासको अवलोकन गरिन् । यसक्रममा उपप्रमुख डंगोलले विद्यार्थीहरुलाई फोहर कहाँबाट प्राप्ती, प्राप्त भएको फोहरको वर्गीकरणको तरीका, सरसफाइ र फोहर वर्गीकरण गर्दा व्यक्तिगत सुरक्षाका उपायलगायत बारेमा जानकारी लिएकी थिइन् ।



विद्यार्थीहरुले उपप्रमुख डंगोलकै अगाडि वर्गीकरण गरिएको फोहर निकालेर तौल गर्दै बिक्री गरेका थिए । यस विद्यालयमा भित्ताभरि सोकेस राखिएको छ । सोकेसको माथिल्लो भागमा ४ खण्ड छन् । बिचको भागमा सूचना र जानकारी दिने ठाउँ छ । तल्लो भागमा ८ कोठा छन् । यी हरेक कोठामा छुट्टाछुट्टै फोहर राखिन्छ ।

यो संरचना हेर्दा फोहरलाई संकलन गरेर व्यवसायिक रुपमा बिक्री गर्न राखिएको जस्तै देखिन्छ । उपलब्ध ठाउँमा विद्यार्थीहरुले गरेको यो प्रयासको प्रशंशा गर्दै उपप्रमुख डंगोलले थालिएको कामलाई निरन्तर सञ्चालन गर्न प्रोत्साहन दिइन् ।

‘बाल उमेरमा सिकेको ज्ञानले जीवनभरी काम दिन्छ । यसकारण बालबालिकालाई वातावरणीय सुधारका लागि दायित्व बोध गराउन वावा कार्यक्रम प्रभावकारी रहेकोले यसलाई बुक फ्री फ्राइडेसँग जोडिएको हो’ डंगोलले भनिन् । कार्यक्रममा साझेदारका तर्फबाट एकीकृत सहरी विकास केन्द्रका कार्यकारी निर्देशक नविन विकास महर्जनले फोहर व्यवस्थापन अभ्यास प्रयोगमा आउन थालेपछि आकाशे पानी पुनर्भरणको कार्यक्रम कार्यान्वयन गरिने बताए ।

# ट्रम्पले गरे अश्वेत आन्दोलनलाई सघाएका सैन्य नेतृत्वलाई बर्खास्त



काठमाडौं । अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले गत शुक्रबार राति देशका सबैभन्दा ठूलो सैन्य अधिकारीलाई अचानक पदमुक्त गरिदिएका छन् । ट्रम्पले अमेरिकी सेनाका ज्वाइन्ट चिफ स्टाफ (जेसीएस) का अध्यक्ष चार्ल्स सी. क्यू. ब्राउन जुनियरलाई पदमुक्त गरेका हुन् ।

जेसीएस अमेरिकाको रक्षा विभागका सबैभन्दा वरिष्ठ सैन्य कमाण्डरहरूको समूह हो । यो समूहले राष्ट्रपति, रक्षा मन्त्री, होमल्याण्ड सेक्युरिटी काउन्सिल र नेशनल सेक्युरिटी काउन्सिललाई सैन्य मामिलामा सल्लाह दिन्छ । सी. क्यू. ब्राउनले सन् २०२० मा ब्ल्याक लाइभ्स म्याटर आन्दोलनलाई सार्वजनिक रूपमा समर्थन गरेका थिए । यो आन्दोलन अश्वेत नागरिक जर्ज फ्लोयडको हत्या पछि सुरु भएको थियो । त्यसबेला ब्राउन अमेरिकी वायुसेनाका चिफ अफ स्टाफ थिए ।

त्यस समयमा ट्रम्प अमेरिकी राष्ट्रपति थिए । सन् २०२० को राष्ट्रपति चुनावमा ट्रम्पको पराजयमा यस आन्दोलनको ठूलो भूमिका रहेको मानिन्छ ।

ब्राउनसँगै ट्रम्पले अन्य ५ सैन्य अधिकारीलाई पनि बर्खास्त गरेको अमेरिकी सञ्चार माध्यमहरूले लेखेका छन् । उनीहरू रक्षा विभागका अधिकारीहरू रहेका छन् । बर्खास्त हुनेमा नौसेना प्रमुखको जिम्मेवारी सम्हाल्ने पहिलो महिला अफिसर एडमिरल लिसा फ्रेन्चेटी, वायुसेनाका डेपुटी चिफ जेम्स स्लाइफसहित सेना, वायुसेना र नौसेनाका तीन उच्च ओहदाका अधिकारीहरू रहेका छन् ।

ट्रम्पले ब्राउनको स्थानमा रिटायर्ड वायुसेना जनरल ड्यान केनलाई जेसीएस अध्यक्षको जिम्मेवारी सुम्पिएका छन् । ट्रम्प र ड्यान केनबीच सन् २०१८ मा इराकमा भेट भएको थियो । त्यतिबेला केनले आफू ट्रम्पका लागि ज्यान दिन पनि तयार रहेको बताएका थिए ।

ट्रम्पले तत्कालीन जो बाइडेन नेतृत्वको सरकारले ड्यान केनको पदोन्नति रोकेको आरोप लगाए । ‘ड्यान केनको पदोन्नति रोकिएको थियो किनभने उनी मेरा नजिकका थिए । उनी फोर-स्टार अफिसर बन्न लायक थिए,’ ट्रम्पले भने ।

यसअघि अमेरिकामा सरकार परिवर्तन भए पनि जेसीएस अध्यक्षलाई हटाउने परम्परा थिएन । सामान्यतः जेसीएस अध्यक्षले चार वर्षको कार्यकाल पूरा गर्छ र दुई प्रशासनलाई जोड्ने काम गर्छ । तर, ब्राउनलाई मात्र १६ महिनामै हटाइयो । उनलाई १ अक्टोबर २०२३ मा जेसीएस अध्यक्ष बनाइएको थियो ।

उनी अमेरिकी सैन्य इतिहासमा दोस्रो अश्वेत अधिकारी थिए, जसले यो पद प्राप्त गरेका थिए । उनी फोर-स्टार फाइटर पाइलट पनि हुन् ।

अमेरिकी रक्षा मन्त्री पीट हेगसेथले पद सम्हाल्नु अघि नोभेम्बरमा ब्राउनलाई हटाउने संकेत गरेका थिए । उनले अमेरिकी सेनामा विविधता र समानता (डीईआई) नीति हटाउनुपर्ने बताएका थिए । ‘अमेरिकी सेनाबाट विविधता र समानताको नीति हटाउनुपर्छ, र यसको पहिलो कदम ज्वाइन्ट चिफ अफ स्टाफका अध्यक्षलाई बर्खास्त गर्नु हो,’ उनले भनेका थिए । अब ब्राउनलाई हटाइएको घटनालाई सोही अभिव्यक्तिसँग जोडेर हेरिएको छ ।

# नेपाललाई दिइएको अनुदानलाई ट्रम्पद्वारा ठगीको संज्ञा !

काठमाडौं- अमेरिकाले नेपाललाई दिइरहेको अनुदान रकम एकपछि अर्को गर्दै रोकिन थालेको छ । सुरुमा नेपालभित्र २ खर्ब ६५ अर्बका परियोजना चलाइरहेको युएसएडका सबै कार्यक्रम रोकेका राष्ट्रपति डोनाल्ड ट्रम्पले एमसीसी परियोजनासमेत रोकिदिएका छन् ।

ट्रम्पले कार्यकारी अधिकार प्रयोग गर्दै संसारभर दिइएको अनुदानमा अंकुश मात्रै नभएर दिन बन्द गर्ने घोषणा गरेका छन् । अमेरिकी सहायता परियोजना युएसएड र एमसीसी रोकिएकै बेला राष्ट्रपति ट्रम्पले नेपाललाई गरिएका दुईवटा सहयोगका विवरण नै सार्वजनिक गरेका छन् । उनले नेपाल र भारतलाई दिइएका सहयोगका विवरण सार्वजनिक गर्दै किन यसरी लगानी गरिएको होला भनेर प्रश्न पनि गरेका छन् ।

ट्रम्पले बुधबार एक दस्तावेज सार्वजनिक गर्ने क्रममा नेपालमा वित्तीय संघीयता कार्यान्वनका लागि अमेरिकाले दिएको २ करोड अमेरिकी डलरको विवरण सार्वजनिक गरिदिएका छन् । उनले नेपाललाई वित्तीय संघीयताका लागि दिइएको उक्त रकमको नम्बर सुनाउँदै ठगीको संज्ञा दिएका छन् । ‘नेपालको वित्तीय संघीयताका २० मिलियन डलर पठाएको रहेछौं’, उनले दस्तावेज पढ्दै भने, ‘यी नम्बरहरू सुन्नुस् त, यी सबै ठगी हुन् ।’ उनले नेपालको जैविक विविधता संरक्षणका लागि एक करोड ९० लाख डलर पठाएको भन्दै त्यसलाई पनि अनावश्यक भनेका छन् ।

ट्रम्पका निकट सहयोगी इलोन मस्क नेतृत्वको डिपार्टमेन्ट अफ गभमेन्ट इफिसिएन्सी (डज) ले तयार पारेको दस्तावेजमा नेपाललाई दिइएका दुई सहयोगसम्बन्धी विवरण उल्लेख छ । ट्रम्पले सार्वजनिक गरेको दस्तावेजमा नेपाल र भारतसहित विभिन्न



देशलाई अमेरिकाले विगतमा विभिन्न शीर्षकमा गरेका सहयोगको लामो सूची छ । यस्तोमा ट्रम्पले यसअघि डेमोक्रेट सरकारले नेपाललाई दुई शीर्षकमा दिएको सहयोगलाई ठगी भनेका हुन् ।

उनले अमेरिकाबाट भारतका मतदातालाई पनि २ करोड १० लाख डलर पठाएको विवरण सार्वजनिक गरेका छन् । ‘हामीले भारतीय मतदाताका नाममा किन यो सहयोग दिइरहेका छौं ? मतदान प्रतिशत बढाउने नाममा त्यहाँ उनीहरूले धेरै पैसा पाए । तर धेरै कर लगाउने देशहरूमध्ये भारत पनि हो । भारतप्रति सम्मान छ । भारतीय प्रधानमन्त्रीप्रति सम्मान छ । तर यो सहयोग अनावश्यक हो ।’

ट्रंपले भारतमा मतदान प्रतिशत बढाउन दिइरहेको आर्थिक सहयोग रोक्ने निर्णयबारे पनि बोलेका छन् । ‘हामी भारतलाई २१ मिलियन डलर (२.१ करोड अमेरिकी डलर) किन दिइरहेका छौं ? उनीहरूसँगै धेरै पैसा छ । भारत विश्वमा सबैभन्दा कर लगाउने देशमा एक हो । हामी मुश्किलले उनीहरू नजिक पुग्न सक्छौं । किनकी उनीहरूको करको दर धेरै उच्च छ ।’

हालै अमेरिकाको नयाँ सरकारी विभागका रुपमा स्थापित खर्चपति इलोन मस्कको नेतृत्व रहेको डिपार्टमेन्ट गभर्नमेन्टएफिशिएन्सी (डीओजीई) ले विभिन्न देशलाई जाने अमेरिकी सहयोग रोक्ने घोषणा गरेको थियो । यसमा नेपालको संघीयता बलियो बनाउन र छिमेकी भारतमा मतदान बढाउन अनुदान दिइरहेको थियो । अब यी दुवै देशका अनुदान कटौतीमा परेका हुन् ।

# चीनका सडकमा देखिए रोबो कप !




काठमाडौं । आर्टिफिसियल इन्टेलिजेन्सपछि बजारमा एआई रोबोटको प्रवेश भइसकेको छ । एप्पल तथा मेटाजस्ता दिग्गज अमेरिकी कम्पनीले यस क्षेत्रमा काम गर्ने तयारी गरिरहेको र इलोन मस्कलाई समेत आंशिक मात्रै सफलता प्राप्त भएको छ । तर, चीन भने एआई रोबोटको क्षेत्रमा विश्वका अन्य देशभन्दा निकै अगाडि बढिसकेको छ । चीनमा रोबोट पुलिस सडकमा देखिन थालेका छन् ।

चीनको ग्वान्जाओ प्रान्तस्थित सेन्जेनमा एआई रोबोटहरु तीव्र रुपमा लोकप्रिय बनिरहेका छन् । सेन्जेनको नानशान जिल्लामा एउटा रोबोटले सार्वजनिक ठाउँमा प्रहरी अधिकारीको रुपमा काम गरिरहेको पिपुल्स डेलीले जनाएको छ । उक्त रोबोट चिनियाँ एआई डीपसीकको अत्याधुनिक लार्ज ल्याङ्वेज मोडेलमा आधारित छ ।

यो रोबोटको विशेषता ?

यहीं एआई प्रविधिको प्रयोग फुटियन जिल्लामा प्रशासनिक सरकार तथा सार्वजनिक सेवालाई राम्रो बनाउनका लागि गरिँदैछ । सोमबार यसको एउटा भिडियो पनि सार्वजनिक गरिएको छ जसमा १.३८ मिटर लामो मानवस्वरुप रोबोट (ह्युमानोइड रोबोट) लाई देखाइएको छ । उक्त रोबोटले पुलिस अधिकार ीसँग हात मिलाउँदै तथा अन्य मानिसहरुतर्फ हात हल्लाउँदै गरेको देखिन्छ ।

चीनमा प्रयोग भईरहेको उक्त रोबोटलाई शेन्जेन इन्जिन एआई रोबोटिक प्रविधि कम्पनीले तयार पारेको हो । ग्लोबल टाइम्सका अनुसार कम्पनीका प्रवक्ताले यस्तो खालका तीनवटा रोबोट लन्च गरिएको बताएका छन् । पछिल्लो संस्करणको नाम पिएमजिरोवन एज्न हो, जसलाई वास्तविक दुनियाँमा काम गर्ने तरिकाले तयार पारिएको छ ।

यो रोबोट १.३८ मिटर अग्लो छ जसको वजन करीब ४० केजी छ । यो रोबोटमा २४ डिग्री अफ फ्रिडम फिचर रहेको छ । जसका कारणले गर्दा यसले प्रतिसेकेण्ड २ मिटरको गतिमा हिड्न सक्छ । यसको कम्मरमा ३ सय २० डिग्रीमा घुम्ने मोटर जोडिएको छ, जसले विभिन्न खालका चालमा यसलाई सहयोग गर्दछ ।

स्मरण रहोस्, चीनमा रोबोटको प्रयोग भएको यो पहिलो पटक भने होइन । यसअघि पनि सेन्जेनमा रोबोटलाई घुमिरहेको देखिएको थियो, जसको भिडियो पनि भाइरल बनेको थियो । उक्त रोबोटलाई पनि सोही कम्पनीले बनाएको थियो, जसको नाम क्ण्ज्ञ थियो । उक्त रोबोट १.७ मिटर लामो थियो । कम्पनीका अनुसार क्ण्ज्ञ ले मानिसले जस्तै विभिन्न काम गर्न सक्छ । यसले स्क्वाट्स, पुसअप, स्पिनिंग, दौड जस्ता विभिन्न काम कार्य गर्नसक्छ । हालको समयमा विश्वमा विद्यमान अन्य रोबोटहरुमा मानिस जस्तै गरी हिड्ने चालको विकास गर्नु निकै जटिल विषयको रुपमा रहेको छ । तर चीनले यस क्षेत्रमा तीव्र गतिमा उपलब्धि हासिल गरिरहेको छ र प्रहरी अधिकारीको रुपमा रोबोटको प्रयोग गर्नु एउटा ठूलो उपलब्धि हो । एजेन्सीको सहयोगमा

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### साँस्कृतिक अतिक्रमण रोक्न आवश्यक !

धार्मिक स्थल आम जनसमुदायको लागि आस्थाको केन्द्र हो । सो स्थानमा केबलकार बनाउँदा कसैको पहिचान नमेटिए पनि साँस्कृतिक अतिक्रमण भने हुने गरेको छ । पाथीभरा (मुक्कुम्लुङ)मा पनि यस अघि नै साँस्कृतिक अतिक्रमण भने भइसकेको छ । विगत मा किरातहरुको मुक्कुलुङ भनेर चिनिएको स्थानलाई पाथीभरा बनाएर पहिचान मेटाउने काम भइसकेको छ । यसरी आफ्नो थातथलोको पहिचान मेटिदा पनि स्थानीयहरु मौन बसेको अवस्थामा भार्मिक अतिक्रमण हुनु स्वभाविक नै हो ।

अब भने केवलकार निर्माणले स्थानीयको पहिचान मेटिएको भनेर । ताप्लेजुङको पाथीभरा (मुक्कुम्लुङ) क्षेत्रमा केबलकार निर्माण परियोजनामा विवाद गर्नु यस्तै असमझदारीको उदाहरण भएको देखिन्छ । परियोजनाले पवित्र धार्मिक स्थल 'मुक्कुम्लुङ'को गरिमा जोगाउन भन्दै स्थानीय जनताले 'नो केबलकार' आन्दोलन सुरु गरेका थिए । बिस्तारै, आन्दोलन अराजक हुँदैजाँदा प्रहरीले गोली चलाउनु परेको थियो । यही क्रममा शनिवार राति केबलकार निर्माण विरोधीसमूह र प्रहरीबीच झडप भएपछि ताप्लेजुङ जिल्ला प्रशासनले फुङलिङ क्षेत्रमा आइतबारदेखि अनिश्चितकालीन निषेधाज्ञा जारी गरेको छ । प्रशासनले जुलुस निस्कन र त्यसपछि शान्ति भङ्ग हुनसक्ने परिस्थिति भएकाले निषेधाज्ञा जारी गर्नुपरेको जनाएको छ ।

केबलकार निर्माणले मुक्कुम्लुङको पहिचान मेटिने भन्दै पहिचानका पक्षधरहरू विरोधमा उत्रेको बताइएको छ । अर्कोतिर, स्थानीय नगरपालिकाका प्रमुखलगायत केबलकार निर्माणबाट पहिचान नमेटिने तर स्थानीय विकास र जनजीविकामा सकारात्मक योगदान हुने भन्दै परियोजनाका पक्षमा देखिएका छन् ।

आफ्नो समुदायको गौरव जोडिएको पवित्र स्थलको पहिचान र स्वच्छतामा आँच आउन नदिने स्थानीयहरूको चाहनालाई अस्वाभाविक वा अनुचित भन्नु अन्याय हुन्छ । अर्कोतिर, केबलकार निर्माण गरिएका धार्मिक स्थलको महिमा बढेको र स्थानीय क्षेत्रको आर्थिक विकासमा योगदान पुग्नेगरेको यथार्थ पनि बिर्सनु हुँदैन ।

गहिरिएर विचार गर्ने हो भने केबलकार निर्माण गर्न र मुक्कुम्लुङको पहिचान तथा पवित्रता जोगाउन चाहनेहरू पक्षविपक्ष भन्दा एकअर्काका परिपूरक हुन् । आन्दोलनरत समुदाय र परियोजना प्रबर्धकहरूका बीचमा सार्थक संवाद भएमा यो विवाद सहजै समाधान हुने देखिन्छ ।

केबलकार निर्माण गरिएका नेपालकै अरू धार्मिक क्षेत्रहरूको महिमा र ख्याति बढेर गएता पनि सांस्कृतिक पहिचानमा अतिक्रमण भने हुने गरेको छ । तसर्थ केबलकार निर्माणपछि त्यस भेगका जनजीवनमा सकारात्मक परिवर्तन र भौतिक विकास पनि भएको देखिन्छ । अर्थात्, केबलकार निर्माणबाट स्थानीय समुदायलाई लाभ नै भएको छ । केबलकारले धार्मिक स्थलहरूको आकर्षण बढाउने गरेको छ । केबलकार धार्मिक आस्थाका केन्द्र र सांस्कृतिक धरोहरप्रति नयाँ पुस्तालाई आकर्षित गर्ने उपाय पनि बनेको देखिएको छ ।

हुनत, जनतामा असन्तोष बढाएर राजनीतिक वा अन्य लाभ लिने तत्त्व पनि आन्दोलनमा घुसेको हुनसक्ला । तर, मूलतः स्थानीयको आर्थिक हित र साँस्कृतिक रुपमा अतिक्रमण रोक्न भने सरोकारवालाहरुले ध्यान पुऱ्याउन आवश्यक छ । आन्दोलनरत पक्ष र परियोजना पक्ष यस तर्फ सजग हुनु आवश्यक छ ।

सरकारको बलको प्रयोग गरेर परियोजना अगाडि बढाउन खोज्ने र आन्दोलनरत पक्ष नो केवलकारको पक्षमा अडिग रहे यो सम्भव पनि हुँदैन । यसैले सरकारले तत्काल दुवै पक्षलाई वार्तामा राखेर निकास निकाल्न मध्यस्थता गरोस् ।

# इतिहासले न्याय नगरेका राना मगर

● राजकुमार दिक्पाल

प्रतापसिंह शाहको समयमा सर्वजित राना सक्रिय रहेको एक पत्र इतिहासकार दिनेशराज पन्तले "पूर्णिमा" को पूर्णाङ्क १७ (वैशाख-असार २०२५ :२९)मा प्रकाशित गरेका छन् ।

वि.सं. १८३२ साउन सुदी ५ रोज ३ मा तात्कालीन राजा प्रतापसिंह शाहले दलमर्दन शाहलाई हात्ती उपहार दिँदा यसबारेको जानकारी पाउने भारदारमा सर्वजित् राना पनि एक छन् । पत्रमा "आगे गंगाधर दरोगा लछिमिनारायेन दरोगा मेघु षवास जोरावर षवास दलमर्दन साह धरानि पंथ सर्वजित रानाप्रति. दलमर्दन साहके सुव्वाई मानको हाति १ हात ४ चार्को वक्स्यु. आगे साल वाधि लिनु" भन्ने व्यहोरा उल्लेख छ ।

हालको प्रधानमन्त्री सरह पद पाएका मूलकाजी सर्वजित रानाको कार्यकाल लामो समय रहन पाएन । उनी कालगतिले मर्न पनि पाएनन् । त्यहीबेला राजेन्द्रलक्ष्मी र सर्वजीतबारे करणी बिराएको बातको हल्ला चल्यो । बहादुर शाह चौतारिया दलजित शाहले श्रीहर्ष पन्थको सहयोग लिएर आठपहरियाहरूद्वारा दरबार घेर्न लगाई राजेन्द्रलक्ष्मीलाई चाँदीको नेल ठोकी दरबारभित्रै थुनेर मूलकाजी सर्वजीत राना र उनको अनुयायीलाई पक्री कुमारी घरको छिँडीको कोठामा लगेर रातको समय कटाइदिए (ज्ञानमणि नेपाल, "नेपालको महाभारत"-२०५२ :१८-२०)।

दरबारभित्रको यस षडयन्त्रपछि बहादुर शाह शक्तिमा आई नायवी लिएपछि बालक राजा रणबहादुर शाहकातर्फबाट केही भारदारका नाममा एक लालमोहर प्रसारित गराइदिए । योगी नरहरिनाथले "इतिहास प्रकाशमा सन्धिपत्र सङ्ग्रह" भाग १ (२०५५ :३१) मा प्रकाशित गरेको उक्त लालमोहरमा "सर्वजित रानाले अकर्म गऱ्यो र काटियो मूलुकको भंनु श्रीमाहिला बाबालाइ बक्स्यौं इनैका मार्फत सित मामिला गर" भन्ने उल्लेख छ ।

समयको चक्र घुम्दै जाँदा फेरि बहादुर शाहलाई दबाएर काका ससुरा चौतरिया महोद्दामकीर्ति शाहको सहयोगमा राजेन्द्रलक्ष्मी सत्ता र शक्तिमा आइपुगिन् । बहादुर शाहका मुख्य सहयोगी चौतरिया दलजित शाह देश निकालामा परे । धने खवास र बलभद्र खवास हात्तीको पाइलाले कुल्चाएर मारिए । गौरीकान्त र कोटसिंहलाई शूलीमा हालेर मारियो । बहादुर शाहका अर्का सहयोगी श्रीहर्ष पन्तलाई गालामा डामेर मर्स्याङ्दी पारी धपाइयो । त्यसपछि आफ्ना छोरा रणबहादुर शाहको नायवी लिएर उनी सत्तामा सर्वेसर्वा भइन् । आफू शक्तिमा आउनासाथ उनले सर्वजित रानाका भाई बन्धु राना र देवदत्त थापा मगरलाई काजी बनाइन् (नेपाल,२०५२ :२०)।

बन्धु राना आफ्नो समयका चल्तीका काजी थिए। उनका छोरामध्ये सुरबिर रानाले मनकामना मन्दिरमा सुनका ढोका बनाई दुई खापामा अभिलेख पनि कुँदाएका थिए। सुरबिरका बाबु बन्धु राना र बाजे जैराज रानाले गोरखा दरबारको भारदारीमा राम्रै स्थान पाएका थिए।

मनकामनाको वि.सं. १८५९ चैत वदली ६ को अभिलेखमा "जैराज रानाको नाती बन्धु रानाको छोरा सुरवीर रानाले धर्मपत्र लेषि चऱ्हाया" भनी लेखिएकोले यसबाट सुरविर राना ठूलै पदमा थिए भन्ने देखिन्छ (धनबज्र बज्राचार्य र टेकबहादुर श्रेष्ठ, "शाहकालका अभिलेख"-२०३७ :३७६) । इतिहासकार नेपाल (२०५२ :१८-२०)ले बन्धु रानालाई बहादुर शाहको षडयन्त्रमा काटिएका मूलकाजी सर्वजित रानाका भाइ भन्ने उल्लेख भएकोले उनको बाबुको नाम जैराज राना हो भन्ने देखिन्छ ।

इतिहासकार भगिराज इङ्नामले "लिम्बूवानको ऐतिहासिक दस्तावेज सङ्ग्रह" (२०७७ :६१४)मा सुरबिर रानाको छापसहित वि.सं. १८६० माघ सुदी १५ रोज ५ को पत्र प्रकाशित गरेका छन् । त्यसमा उनको पद 'चार अदालतका अमालि ददा' उल्लेख भएकोले उनी न्यायनिसाफको जिम्मेवारीमा थिए भन्ने स्पष्ट हुन्छ ।

बन्धु रानाका सन्तानमध्ये केही नुवाकोटतिर पुगे भन्ने देखिन्छ। बन्धुका अर्का छोरा फौदबिर रानासम्बन्धी एक लालमोहरबाट यो थाहा पाइन्छ । सांस्कृतिक अन्वेषक देवेन्द्र खापुङबाट यो लेखकले प्राप्त गरेको फौदबिरको जागिरसम्बन्धी वि.सं. १८६५ कात्तिक वदी १ रोज ४ मा राजा गीर्वाणयुद्धविक्रम शाहले जारी गरेको लालमोहरमा "जयराज रानाको नाति वंन्धु रानाको छोरा वतन नुवाकोट फौदबिर रानाके बलवंन्त रानाको षायेल जुमिलाको सुंवांगी मानको पगरि बक्सौं" भन्ने परेबाट फौदबिर त्यसबेला नुवाकोटमा बस्दै गरेका र उनले जुम्लाको सुब्बाको जागिर पाएको भन्ने स्पष्ट हुन्छ । फौदबिरले नुवाकोटको देवीघाटमा वि.सं. १८७२ चैत सुदी ८ रोज २ मा सत्तल निर्माण गरी एक सय मुरी धान आउने खेत गुठी समेत राखिदिएका थिए (बज्राचार्य र श्रेष्ठ, २०३७ :५८४)।

मूलकाजी सर्वजित राना र काजी बन्धु रानाका बुबा जैराज राना पृथ्वीनारायण शाहकालिन गोरखा दरबारका महत्त्वपूर्ण भारदार थिए । इतिहासकार धनबज्र बज्राचार्यले "कन्ट्रीब्यूसन टु नेपालिज स्टडिज" (सिनास जर्नल)को वर्ष १० अङ्क १ र २ (डिसेम्बर १९८२-जून १९८३ :११२-१३)मा कपर्दार सुरसिंह रानालाई काभ्रेकोटबाट लछिमन राना, वीरसिंह खड्का, प्रतिमन राना र रामेश्वर रानाले युद्धमा आफूहरूले पाएको दु :ख र देखाएको बहादुरीका बारेमा उल्लेख गरेको पत्र प्रकाशित गरेका छन् । यो पत्रमा आफूहरूले बहादुरीपूर्वक युद्ध लडेको र घाइते भएको भए पनि आफूहरूको उचित कदर नभएको गुनासो कपर्दार सुरसिंह रानासमक्ष पोखेका छन् । यो पत्रको छेउमा "उप्रांत उमरा जेठाबुढा २ सव बरह्याको सलाम १-जैराज राना जैऱ्या अरू केटाहेरु" भन्ने परेबाट त्यसबेला जैराज रानाको पद जेठाबुढा थियो भन्ने देखिन्छ ।

यो पत्रको तिथीमा माघ कृष्ण १४ रोज ५ मा उल्लेख छ,साल खुलाइएको छैन । तर काभ्रेकोटको युद्ध वि.सं. १८१६ मा भएको र उक्त सालको पात्रोमा तिथी भिडाउँदा माघ कृष्ण १४ बिहीबार नै पर्ने भएकोले यो पत्र वि.सं. १८१६ कै ठहर्छ ।

यस्तै रणबहादुर शाहको समयमा सक्रिय भारदार अमर सिंह राना पनि उनै जैराजका एक छोरा जसिवन्ततिरका नाती हुन् भन्ने देखिन्छ । वि.सं. १८५५ मा रणबहादुर शाहले गीर्वाणयुद्धविक्रम शाहलाई राजपाठ सुम्पदा भारदारहरूलाई धर्मपत्र गराएका थिए । सो धर्मपत्रमा सही हाल्नेमा अमरसिंह राना पनि एक थिए । धर्मपत्रमा खुलाइएको उनको तीन पुस्तेमा "जैराज रानाका नाति जसिवन्त रानाका छोरा जेठाबुढा अमरसिं राना" भन्ने उल्लेख छ (चित्तरञ्जन नेपाली, "श्री ५ रणबहादुर शाह"-२०७५ :१०९)। यताबाट हेर्दा अमरसिंह राना मूलकाजी सर्वजित र काजी बन्धु रानाका भतिजा भन्ने देखिन्छ।

दरबारिया सेवाका क्रममा वि.सं. १८५७ मा अमरसिंह राना ललितपुरको लुभु क्षेत्रमा कार्यरत देखिन्छन् । तात्कालिन राजा गीर्वाणयुद्धविक्रम शाहले उनको नाममा वि.सं. १८५७ वैशाख सुदी ११ रोज ५ मा सैनिकहरूलाई हतियार लिई नुवाकोटमा हाजिर हुन आउन अमरसिंह रानाको नाममा लेखिएको योपत्र नेपाली (२०७५ :४८)ले प्रकाशित गरेका छन् ।

पृथ्वीनारायण शाहको समयमा पश्चिमी मोर्चाको युद्धमा नेतृत्त्व गर्ने देवु राना, जुम्ला अधिपत्य गर्न खटिएका प्रबल राना, चीन र तिब्बतसँगको युद्धमा पराक्रम देखाउने प्रतिमन राना र भास्कर राना, अङ्गेजसँगको युद्धका गोरखाली बहादुर शमशेर राना, चामु राना र कीर्ति राना आदि वीर मगरको रगत र पसिनाले भिजेको छ नेपालको माटो ।

कोतपर्वमा परेका राना मगर

नेपालको इतिहासमा कोतपर्व एउटा कुख्यात घटनाको रुपमा चर्चित छ । वि.सं. १९०३ भदौ ३१ गते राती मच्चिएको कोतपर्वपछि जङ्गबहादुर सत्ताको शिखरमा पुगे । गोरखाली परम्पराअनुसार ६ थरघर प्रभृतिअनुसार मगरलाई यथोचित स्थानमा अवसर दिइने गरिएको थियो । कोतपर्वअघि तीन पल्टनसहित अभिमानसिंह रानालाई मन्त्रिमण्डलमा समावेश गरिएको थियो ।

माथवरसिंह थापाको हत्यापछि महारानी राज्यलक्ष्मीले गगनसिंहलाई प्रधानमन्त्री बनाउन चाहेकी थिइन् । तर राजा राजेन्द्रको जोडबलले चौतरिया फत्तेजङ्ग शाहलाई प्रधानमन्त्री बनाइयो । भारतमा निर्वासित अवस्थामा रहेका उनलाई बोलाएर प्रधानमन्त्री बनाइयो । त्यसबेला अभिमानसिंह राना पनि भारतमै निर्वासित अवस्थामा थिए । वि.सं. १९०२ असोजमा नेपाल फिर्ता भएपछि उनलाई पनि मन्त्रिमण्डलमा समावेश गरियो, त्यसबेला फत्तेजङ्ग शाह प्रधानमन्त्री भए पनि सात पल्टनसहितका जनरल गगनसिंह शक्तिशाली थिए (बाबुराम आच(र्य, "अब यस्तो कहिल्यै नहोस्"-:२०६८ :११३)। त्यसबेला गगनसिंह, दलभञ्जन पाँडे, जङ्गबहादुर र अभिमानसिंह रानासहितलाई जनरल पद दिइएको थियो ।

भीमसेन थापाले चल्तीमा ल्याएको त्यो समयमा सेनाको आधुनिक पद जनरल पाउने आदिवासी जनजाति समुदायका पहिलो व्यक्ति हुन् - अभिमानसिंह राना मगर । भीमसेन थापा र माथवरसिंह थापाको समयमा उनीहरूका भाइ छोरालाई मात्रै जनरल पद दिइएको थियो । कोतपर्वपछि राणाहरूमा पनि विवाहिताका छोराले मात्रै जनरल पाउने चलन चल्यो ।

कोतपर्वमा अभिमानसिंह रानालाई तात्कालीन महारानी राज्यलक्ष्मीदेवीले गगनसिंहको हत्यारा वीरकेशर पाँडे भएकोले उनलाई तत्काल काट्न भनी आदेश दिँदा उनले भने राजाको आदेश नभई कसैलाई काट्न नसकिने भन्दै रानीको आदेशलाई इन्कार गरेका थिए । कोतको भेलाको अवस्था अराजकतातिर जान लागेको देखेर आत्मरक्षाका लागि उनी आफ्नो पल्टनमा मिसिन खोज्दा जङ्गबहादुरको आदेशमा युद्धवीर अधिकारी नामका सिपाहीले सङ्गीनले उनको छातीमा प्रहार गरे (नेपाल, २०५२ :२३४-३५)

कोतपर्वमा ज्यान गुमाउने उनी पहिलो भारदार थिए । उनले आफू मर्नुअघि 'गगनसिंहको हत्यारा जंगे हो' भनी चिच्याएका थिए । अझ जङ्गबहादुरका छोरा पद्मजङ्ग राणाले "जङ्गबहादुरको जीवनयात्रा" (२०७४ :६९)मा अभिमानसिंह रानाले "गगनसिंहको हत्यारा जंगबहादुर हो भनी रगतले भित्तामा लेखेको" उल्लेख गरेका छन् ।

कोतपर्वमा जनरल अभिमानसिंह राना मारिए । त्यसबेला भागेर ज्यान बचाउनेमा कप्तान कुलचन्द्र राना र कप्तान रत्नसिंह रानाजस्ता मगर पनि थिए (नेपाल, २०५२ :२५९)। सम्भवत : उनीहरू अभिमानसिंह रानाका पल्टनको र उनीसँग बफादार सैनिक थिए । यसैगरी कोतपर्वमा जङ्गबहादुरलाई साथ दिने मगर पनि थिए । तीमध्ये रामु आले, भिमल आलेसहित बुद्धिबल राना मगरले जङ्गबहादुरलाई साथ दिएका थिए । कोतपर्वपछि दुई आलेले सिपाहीबाट एकैपटक कप्तान पाउँदा बुद्धिबल रानाले चाहिँ सिपाहीबाट एकैपटक सुवेदार पद पाएका थिए (पुरुषोत्तमशमशेर जबरा, "श्री ३ हरूको तथ्यवृत्तान्त"-२०६५ :३९)।

जङ्गबहादुर शक्तिमा आएपछि वि.सं. १९१०मा मूलुकी ऐन घोषणा हुँदा त्यहाँ विभिन्न पदाधिकारीहरूलाई पनि साक्षी राखिएकोमा एकैजना मात्रै राना मगरको नाम उल्लेख छ । ती हुन् - लप्टन भीमसेन राना मगर। सम्भवत : त्यसबेला उनी सबैभन्दा उच्च पदका राना मगर थिए ।

अभिमानसिंह रानाको प्रथम प्राणान्तसँगै मगरहरूले कायम गर्दै आएको राजनीतिक विरासतको पनि अन्त्य भयो भने कुँवर खलकका अहिराम कुँवरका सन्तति जङ्गबहादुर राणाको तानाशाही जहानिया शासनको सुरुआत भयो । यो शासन १०४ वर्षसम्म टिक्यो ।

खबरहबबाट

**समाप्त.....**

# रील्स हेर्ने लतले नित्याउन सक्छ गम्भीर समस्या, सावधान !

काठमाडौं । के तपाईंको दिनको धेरैजसो समय रील्स स्क्रोल गर्दै बितिरहेको छ? यो बानीले केही समयका लागि रमाइलोको अनुभूति गराउन सक्छ । तर, के तपाईंलाई थाहा छ लामो समयसम्म मोबाइलमा रील हेर्ने बानीले तपाईंको शारीरिक र मानसिक स्वास्थ्यमा गम्भीर असर पार्न सक्छ? विशेष गरी, बालबालिकामा बढ्दो यो प्रवृत्तिप्रति स्वास्थ्य विशेषज्ञहरू चिन्तित देखिएका छन् ।

स्वास्थ्य विशेषज्ञहरू भन्छन्, अत्यधिक मात्रामा रील हेर्ने बानी स्वास्थ्यका लागि धेरै हिसाबले हानिकारक हुन सक्छ। यसले कुनै पनि काममा लामो समयसम्म ध्यान केन्द्रित गर्ने क्षमतालाई कमजोर बनाउँछ। साथै, लगातार मोबाइलमा समय बिताउँदा शारीरिक सक्रियता घट्छ, जसले दीर्घकालीन रूपमा गम्भीर स्वास्थ्य समस्या निम्त्याउन सक्छ।

रील्सको लत कति हानिकारक छ ?

विशेषज्ञहरूका अनुसार, रील्स हेर्ने बानीले मानसिक स्वास्थ्यमा नराम्रो प्रभाव पार्न सक्छ। रील्समा छिटोछिटो सामग्री परिवर्तन भइरहने भएकाले कुनै पनि काममा लामो समय ध्यान केन्द्रित गर्न कठिन हुन्छ।

साथै, अनुसन्धानहरूले देखाएका छन् कि रील्स हेर्दा डोपामाइन नामक न्यूरोट्रान्समिटर सक्रिय हुन्छ, जसले मानिसलाई अस्थायी रूपमा आनन्द प्रदान गरे पनि दीर्घकालीन रूपमा मानसिक सन्तुलन बिगार्न सक्छ।

'ओपन अवेयरनेस' अभ्यासले दिन्छ समाधान

हार्भर्ड मेडिकल स्कूलका विशेषज्ञहरूले रील्सको लतबाट बच्न ध्यान (मेडिटेसन) र योग जस्ता उपायहरू अपनाउन सुझाव दिएका छन्। यी विधिहरूले मानसिक स्वास्थ्य सुधार गर्ने, राम्रो निद्रा लाग्ने र रील्सको अत्यधिक प्रयोगका कारण उत्पन्न हुने समस्याहरूलाई कम गर्न मद्दत गर्ने उनीहरूको भनाइ छ ।

विज्ञहरूका अनुसार, 'ओपन अवेयरनेस मेडिटेसन' एक प्रभावकारी उपाय हुन सक्छ। यो अभ्यास दिनमा १० मिनेट मात्र गर्दा पनि मनोदशा सुधार गर्न सकिन्छ ।

हार्भर्डका विशेषज्ञहरूका अनुसार, ओपन अवेयरनेस मेडिटेसन जुनसुकै स्थानमा गर्न सकिन्छ-घरमा, अफिसमा, वा यात्रा गर्दा। यसको शुरूआत 'सास लिने ध्यान' (ब्रीदिङ मेडिटेसन) बाट गरिन्छ।

कसरी गर्ने ?

आँखा बन्द गरेर गहिरो श्वास लिनुहोस् र फाल्नुहोस्। यसले शरीरमा अक्सिजनको मात्रा बढाउँछ र स्नायु प्रणालीलाई शान्त पार्छ ।

आफ्नो साससमा ध्यान दिनुहोस्। यदि मन भड्कियो भने, पुनः साससमा केन्द्रित गर्नुहोस्। १० मिनेटसम्म नियमित अभ्यास गर्दा तनाव ४० प्रतिशत कम हुन सक्छ ।

आफ्नो शरीरका सबै भागलाई महसुस गर्नुहोस्, वातावरणलाई अनुभूति गर्नुहोस् र विस्तारै आँखा खोल्नुहोस् ।

यो साधारण ध्यान विधिले रील्स हेर्ने बानीले सिर्जना गर्ने समस्याबाट जोगिन मद्दत गर्न सक्छ। मानसिक स्वास्थ्यलाई स्थिर राख्न र ध्यान केन्द्रित गर्ने क्षमतालाई सुधार गर्न यसको नियमित अभ्यास गर्नुपर्छ।

यदि तपाईंलाई रील्स हेर्ने बानी नियन्त्रण गर्न गाह्रो भइरहेको छ भने माथि उल्लेख गरिएका उपायका अलवा विशेषज्ञसँग परामर्श लिन सक्नुहुनेछ । उनीहरूले दिने सुझावका आधारमा आफ्नो मानसिक र शारीरिक स्वास्थ्यलाई सामान्य बनाउन सक्नुहुनेछ । एजेन्सीको सहयोगमा

# नेपाल भाषाका साहित्यकार सम्मानित



काठमाडौं।काठमाडौं महानगरपालिका-२२ ले साहित्य लेखनका माध्यमबाट नेपाल भाषाको संरक्षण र प्रवर्द्धनमा योगदान गर्नुभएका पाँच साहित्यकारलाई सम्मान गरेको छ । अन्तरराष्ट्रिय मातृभाषा रजत जयन्तीका रूपमा विविध कार्यक्रम आयोजना गरेर मनाउने क्रममा शनिबार वडाले 'कविता वाचन तथा स्रष्टा सम्मान' कार्यक्रम आयोजना गरेको हो । सम्मानित हुनुहुनेमा कथाकार पुष्प चित्रकार, कथाकार सुवर्णकेशरी चित्रकार, कथाकार तथा गीतकार निरञ्जनरत्न शाक्य, कवि नवीन चित्रकार र कवि श्रीराम श्रेष्ठ हुनुहुन्छ ।

कार्यक्रममा भाषा आयोगका अध्यक्ष डा गोपाल ठाकुरले भाषामा विविधता हुनु नै नेपालको सुन्दरता भएको बताउनुभयो । उहाँले पहिले बोलेका भरमा वा लेखेका भरमा दण्डित हुनुपर्ने अवस्था थियो, अहिले त्यो अवस्था छैन भन्नुभयो । वडा नं २२ का अध्यक्ष एवं महानगरपालिकाको शिक्षा स्वास्थ्य समितिका संयोजक चिनीकाजी महर्जनले बहुभाषिक नेपालीले नेपालको सुन्दरता उज्यालो बनाएको उल्लेख गर्नुभयो ।

कामपाको जिम्मेवारीको प्रसङ्ग उठाउँदै वडाध्यक्ष महर्जनले भन्नुभयो, "स्थानीय सरकारको दायित्वभित्र पूर्वाधार निर्माणसँगै सामाजिक, सांस्कृतिक तथा भाषिक अवस्थितिलाई जोगाउनु पनि हो । यसको विकास र विस्तार गर्नु पनि हो । यसकै लागि हामीले प्रयास गरेका हौं ।"

यस क्रममा भाषिक आयोगका सदस्य सुरेशकिरण मानन्धरले युनेस्कोले दिवस घोषणा गर्नुअघि नेपाल भाषालाई मातृभाषाका रूपमा संरक्षण गर्नका लागि कविता वाचन कार्यक्रम आयोजना गरिएको स्मरण गर्नुभयो ।

कथाकार पुष्प चित्रकार २०२२ सालमा रेडियो नेपालबाट नेपाल भाषाको समाचारमा रोक लगाएपछि साहित्य सम्मेलन गरेर विरोधको आयोजना गर्नुभएको थियो । उहाँले निवन्ध, कविता र समलोचनामा पनि कलम चलाउनुभएको छ । कथाकार सुवर्णकेशरीले लेख्नुभएका 'इल फपुइकी' जापानी, अङ्ग्रेजी र नेपाली भाषामा अनुवाद भएको छ ।

निरञ्जनरत्न शाक्य न्हूदँ समारोह समिति ११४२ का अध्यक्ष हुनुहुन्थ्यो । उहाँका नेपाल संवत् १०९८ मा प्रकाशित निकचा, ११०१ मा प्रकाशित ब्वलासालगायत कृति महत्त्वपूर्ण मानिन्छन् । कवि नवीन चित्रकार भाषिक अधिकारका लागि स्थापित मुनासःयाका संस्थापक हुनुहुन्छ । उहाँले नेपाल भाषाको नाटक निर्देशन पनि गर्नुभएको छ । यस्तै पद्मरत्न तुलाधरले लेख्नुभएको शिक्षक र विद्यार्थी नाटकमा शिक्षकको भूमिका निर्वाह गर्नुभएको छ ।

'जुलुसहीन जुलुसय् जि हालाच्वना' कविता सङ्ग्रहका लेखक श्रीराम श्रेष्ठ नयाँ धारको प्रगतिशील कविका रूपमा परिचित हुनुहुन्छ । साहित्यमा कलम चलाउने श्रेष्ठको मूल विधा कविता हो । रासस

# स्थानीय तहबाट समाजवादको अभ्यास गर्न प्रचण्डको निर्देशन

काठमाडौं । नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल प्रचण्डले पार्टी अब आफ्नै वर्गमा फर्केर स्थानीय तहबाट समाजवादको अभ्यास गर्ने अभियानमा अघि बढेको बताएका छन् । माओवादी केन्द्रको केन्द्रीय कार्यालयले राजधानीमा आयोजना गरेको स्थानीय तहबाट समाजवादको पूर्वाधार निर्माणसम्बन्धी अभिमुखीकरणको शनिबार उद्घाटन गर्दै अध्यक्ष प्रचण्डले पार्टी नेतृत्वमा रहेका पालिकाले समाजवादको अभ्यास शुरु गर्नु निर्देशन पनि दिए ।

पूर्व प्रधानमन्त्रीसमेत रहेका अध्यक्ष प्रचण्डले अब माओवादी केन्द्रले नेतृत्व गरेका सबै पालिका नमूना बन्नुपर्ने र टाढैबाट फरक छन् भनेर चिनिने बनाउनुपर्ने बताए । स्थानीय तहबाट समाजवादी अर्थतन्त्र, संस्कृति र शैलीको थालनी गर्न अब पुरानैको निरन्तरता होइन, नयाँको थालनी गर्ने बेला आएको उल्लेख गर्दै उनले यो रणनैतिक सिफ्ट भएको उल्लेख गरे ।

अध्यक्ष प्रचण्डले समाजवादको सैद्धान्तिक बहसलाई व्यवहारिक रुपमा स्थानीय तहबाट निर्माण गर्दै लैजाने पार्टीले निर्णय गरेको जानकारी दिए । पार्टीले आठौं महाधिवेशनबाट अघि सारेको नेपाली विशेषताको समाजवाद निर्माण गर्ने मर्ममा साथ माओवादी केन्द्रले नेतृत्व गरेका कयौं स्थानीय पालिकाले उत्कृष्ट नतिजा दिदै आएको उल्लेख गर्दै अध्यक्ष प्रचण्डले स्थानीय विशेषताअनुसारको समाजवादको अभ्यासका लागि अब जनताले फरक महसुस गर्ने कार्यक्रम अघि बढाउनुपर्ने बताए ।

समुदायसित मिलेर स्थानीय विशेषतासहितको समाजवाद निर्माण गर्नुपर्नेमा सबै नेता कार्यकर्ताको समान बुझाइ हुनुपर्ने उल्लेख गरे । अब विकास बिदेशीको नक्कल गरेर होइन, आफ्नै विशेषतामा अघि बढाउनुपर्ने उल्लेख गर्दै अध्यक्ष प्रचण्डले आउने पीढीको भविष्यलाई समेत ध्यान दिएर नेपाली समाजमा अग्रगामी विकल्प दिनुपर्ने दायित्व माओवादीको काँधमा आएको स्पष्ट पारे ।

उनले १८ महिनाको सरकारको अनुभव र सरकारबाट बाहिरिदै गर्दा जनतामा गरिएको अपिलले जनतामा सकारात्मक प्रभाव पर्दै गएको र माओवादीप्रति पुनः आकर्षण फर्कन थालेको उल्लेख गरे । अध्यक्ष प्रचण्डले पछिल्लो केही समय आवश्यकता भन्दा बढी सहकार्य र समीकरण गर्दै जाँदा आफ्नो वर्ग र समुदायसितको सम्बन्ध कमजोर भएको गम्भीर आत्मसमीक्षा गरेर आफ्नै वर्गमा फर्कनुपर्छ र पार्टीलाई पुरानै अवस्थामा फर्काउन सकिन्छ भन्ने निष्कर्षमा पुगेर नयाँ अभियान थालिएको जानकारी दिए ।

पूर्व राजालाई इङ्गित गर्दै उनले इतिहासको रछ्यानमा मिल्काइएका तत्वहरुले पनि आफूअनुकूल व्याख्या गर्न थालेको उल्लेख गरे । अध्यक्ष प्रचण्डले अब यो देशको अग्रगामी विकल्प माओवादी मात्रै हो भन्ने तथ्य जनताले बुझिसकेको र त्यसलाई व्यवहारबाटै पुष्टि गर्नपर्नेमा जोड दिएका थिए ।

# ४०६ जना रक्तदाताहरूबाट रक्त संकलन

भक्तपुर । पतंजली जिल्ला योग समिति भक्तपुर अन्तर्गतका महिला समिति, युवा समिति र विभिन्न केन्द्र संघ संस्थाहरूको संयुक्त सहकार्य, समन्वय र आयोजनामा हाल देखिएको रक्त अभावलाई सहयोग पु-याउने उद्देश्यले फागुन १० गते सम्ममा ४०६ जना रक्तदाताहरूबाट रक्त संकलन गरि नेपाल रेडक्रसको जिल्ला शाखा रक्त संचार केन्द्र भक्तपुरलाई प्रदान गरेको छ ।

शंखधरचोकमा गत शनिबार बृहत रक्तदान कार्यक्रम आयोजना गर्दै समितिले हालसम्म उक्त रगत संकलन गरेको समितिका सदस्य श्रीराम हाकुतरी श्रेष्ठले जानकारी दिए । त्यस्तै आउने फागुन १७ गते शनिबार मध्यपुर थिमिको बडा नं. ६ स्थित पाटी बिहारमा बृहत स्वास्थ्य सशसवरको आयोजना हुने पनि जानकारी दिए । उक्त स्वास्थ्य हिबिरमा मुख्यत मुटुरोगसँग सम्बन्धित रोगीहरुको स्वास्थ्य परिक्षण हुनेछ भने, उक्त कार्यक्रमको आयोजक मध्यपुर थिमि नगरपालिकाको वडा नं. ६, लायन्स तथा लियो क्लब अफ काठमाडौं लर्डबुद्ध र लायन्स क्लब अफ मध्यपुर शंखधर (३२५ जि) रहेको छ । यस्तै सहयोगी संस्थाहरुमा नेपाल ए.पिएफ. अस्पताल, बलम्बु, ब्लुक्रस ल्याकोटरीज प्रा.लि., प्राञ्जल डाइग्नोस्टिक एढठ हेल्थ केयर प्रा.लि. र नेपाल हृदयरोग निवारण प्रतिष्ठान, काठमाडौं रहेको जानकारी दिइएको छ । कार्यक्रम बिहान ८ बजेदखि शुरु हुने छ ।

# लामो समय कुर्सीमा बसिरहँदा मुटु रोग र मधुमेहको खतरा

काठमाडौं । कार्यालय वा सवारीसाधन अथवा घरमा दैनिक रूपमा एकै ठाउँमा लामो समय गतिहीन भएर एकै ठाउँ लामो समय बसिरहँदा त्यसले मुटु र मधुमेहसम्बन्धी गम्भीर स्वास्थ्य समस्याहरूको खतरा बढाउन सक्ने अध्ययनले जनाएको छ ।

सन् १९५३ मा इपिडिमियोलोजिस्ट जेरेमी मोरिसले गरेको एक अनुसन्धानमा लन्डनमा बस कन्डक्टरको दाँजोमा बस चालकहरूमा मुटुसम्बन्धी रोग दुई गुणाभन्दा बढी हुने देखिएको थियो । जनसाङ्ख्यिक हिसाबले उमेर, लिङ्ग र आयको आधारमा काम गर्ने दुई वटा समूह ब्रिटेनमा समान हुन् तर यस्तो उल्लेख्य फरक किन ?

मोरिसको जवाफ छः बस कन्डक्टरले दुई तले बसमा भऱ्याङ पनि चढ्नुपर्थ्यो र टिकट बेच्दा उभिनु पर्थ्यो तर बस चालक भने लामो समयसम्म सीटमा बसिनै रहन्थे ।

उनको ऐतिहासिक अध्ययनले शारीरिक गतिविधि र मुटुको स्वास्थ्यबीचको सम्बन्धबारे प्रारम्भिक अध्ययन गरेको थियो । अहिले लन्डनमा बसमा कन्डक्टर हुने भन्ने विगतको कुरा भए पनि मोरिसको परिणाम विगतमा कहिल्यै नभएको तहमा सान्दर्भिक भएको छ ।

कोभिड-१९ महामारीयता घरबाटै काम गर्ने विषयमा ठूलो परिवर्तन आएको छ र यो बढ्दो क्रममा हुँदा हाम्रो एकै ठाउँमा बसिरहने समय बढाउने देखिन्छ । लामो समय एकै ठाउँमा बस्दा (सेडेन्टरी बिहेभिअर) मानिसले बसिरहने कारणले ऊर्जा कम खर्च गर्छ र मुन्टो निहुराएर बस्छ ।

आमरूपमा टीभी हेर्नु, गेम खेल्नु, सवारी चलाउनु र कुर्सीमा बसेर काम गर्नुजस्ता कुराहरू त्यसमा पर्छन् । एकै ठाउँमा धेरैबेर बसिरहनु मुटु रोग र टाइप २ डायबिटिज तथा अल्पायुमै मृत्यु जस्ता समस्यासँग जोडिएको हुन्छ । सन् २०२० मा विश्व स्वास्थ्य सङ्गठनले यस्तो व्यवहार कम गर्न उपायहरू सुझाएको थियो ।

सन् २०१० यता अनुसन्धानकर्ताहरूले शारीरिक गतिविधिको कमी र एकै ठाउँमा लामो समय बस्नु भन्ने फरक हो भनेर छुट्टाउन खोज्दै आएका छन् ।

तपाईंले दैनिक पर्याप्त व्यायाम गरेर पनि लामो समय बस्न सक्नुहुन्छ । यद्यपि लामो समय एकै ठाउँमा बसिरहनेको खतरा व्यायाम पर्याप्त नगर्नेहरूमा उच्च हुन्छ ।

नचलमलाइ एउटै ठाउँमा लामो समय बस्दा त्यसले मुटुसम्बन्धी रोगको खतरा किन बढाउँछ ?

प्रारम्भिक अनुमान के हो भने खास गरी खुट्टामा रक्त प्रवाह कम गरिदिँदा त्यसले काम नगर्ने खतरा बढाइदिन्छ । अस्ट्रेलियाको मेलबर्नस्थित डीकिन युनिभर्सिटको फिजिकल एक्टिभिटी एन्ड न्युट्रिसनका फिजियोलोजिस्ट डेभिड डन्स्टनले लामो समय बसिरहनु र त्यसको असरबारे बृहत् अध्ययन गरेका छन् ।

"मांसपेशीको गतिविधिमा कमी ल्याउनुले बसाइको विशेषता देखाउँछ," डन्स्टनले भने । "म यदि कुर्सीमा छु भने कुर्सीले नै सबै जिम्मेवारी लिइरहेको हुन्छ ।"

मांसपेशी कम चल्नु, कम मेटाबोलिक माग र गुरुत्त्वाकर्षण कम हुँदा त्यसले खुट्टाको मांसपेशीमा कम रक्तसञ्चार गर्छ र त्यसले पिँडुलामा रगत जम्छ । खुट्टा दोबारेर बस्दा पनि त्यसले रक्त प्रवाह कम गर्न सक्छ । खुट्टाको मांसपेशीमा गतिविधि कम हुनुले 'मेटाबोलिक डिमान्ड' घटाइदिन्छ । रक्त प्रवाहको प्रारम्भिक निर्धारक भनेको मेटाबोलिक डिमान्ड हो । त्यसैले खुट्टामा रक्त प्रवाह कम हुन्छ ।

त्यसैले खुट्टा दोबारेर बस्दा त्यसले पिँडुलामा रगत जम्छ - २१ युवा स्वयंसेवकबीच गरिएको अध्ययनले दुई घन्टामा उनीहरूको पिँडुला करिब एक सेन्टिमिटरले बढ्यो। यसले पनि रक्त प्रवाह कम गर्न सक्छ । अनुसन्धानकर्ताहरूका अनुसार १२०-१८० मिनेटसम्म लगातार बसिरहनुलाई लामो समयमा बसेको मान्नुपर्छ । तर बस्ने अवधि बढ्दा त्यसले रक्त प्रवाह नहुने सम्भावना बढ्छ ।

चिल्लो खानेकुरा धेरै खाएर लामो समय बस्नु सबैभन्दा हानीकारक हुने ठानिन्छ । मांसपेशीय कङ्काल प्रणाली (मस्कुलर स्केलेटल प्रणाली) पनि प्रभावित हुन सक्छ । लामो समय बस्दा त्यसले मांसपेशी कमजोर बनाउँछ, हड्डीको घनत्व कम गराउँछ र तन्तुहरूमा बोसो बढाउँछ । साथै, लामो समय एउटै ठाउँमा बस्दा त्यसले शारीरिक असहजपना, काममा तनाव, उच्च डिप्रेसनका लागि पनि कारक बन्न सक्छ ।

टाइप टु डायबिटिजमा अनुसन्धान गरेका डन्स्टनले बसिरहने कार्य खानापछि बढ्ने र त्यसले रगतमा ग्लुकोज र इन्सुलिन बढाउने कुरा उल्लेख गरेका छन् । यी सम्भावित र थाहा भएका परिणामहरू भए पनि हामी किन लामो समय बस्छौं - के हामी यो बानी परिवर्तन गर्न सक्छौं ?

"मलाई लाग्छ मानिसहरू थप गतिहीन भइरहेका छन् किनभने समाजले यसैलाई प्रोत्साहित गरिरहेको छ," युनिभर्सिटी अफ सरेका सामाजिक मनोवैज्ञानिक बेन्जमिन गार्डनरले भने । उनले मानिसहरू किन लामो समय एकै ठाउँमा बस्छन् भनेर अनुसन्धान गर्दै आएका छन् ।

"कसैले जानाजान यसो गर्न दबाव दिइरहेका होइनन् । यसो गर्दा बढी काम सक्न सजिलो भएको हो र हामीले आफ्नो काम गर्न खासै धेरै यताउता चल्नु पनि पर्दैन ।" सन् २०१८ मा, गार्डनर र उनका सहकर्मीहरूले बैठकहरू गर्दा उभिने कुराले अनौठो खालको सामाजिक कठिनाइ ल्याएको थियो ।

"हामीले मानिसहरूलाई तीन वटा फरक बैठकहरूमा उभिन प्रेरित गर्‍यौं, र उनीहरूको बैठक सकिएपछि प्रत्येक पटक अन्तर्वार्ता गर्‍यौं र परिणामहरू चाखलाग्दा थिए," गार्डनरले भने । "एउटा औपचारिक बैठकमा, उभिनु उपयुक्त नहुने महसुस गरियो ।"

बसिरहेको ठाउँबाट बेला बेला उठ्ने, हल्का हिँड्ने वा भऱ्याङका केही खुड्किला उक्लिँदा पनि फाइदा पुग्ने देखिएको छ । हामीलाई लामो समय नबस्नको लागि प्रविधिले पनि झक्झकाउन सक्छ । एउटा नयाँ अध्ययनमा, एसिलिरोमिटर्स नामक शरीरमा लगाउने उपकरणले हाम्रो हिँडाइ, उभ्याइ, सुताइ र व्यायामको २४ घन्टे डेटा राख्छ । डन्स्टानले यसले उभिने समय र लामो समय बसिरहेकोबारे जनाउ दिने बताए ।

यद्यपि, प्रविधिको प्रयोग यसको असर बिना हुँदैन । केही मानिसलाई यसले दिक्क बनाएको वा असंवेदनशील बनाएको हुनसक्छ । गार्डनर र सहकर्मीहरूले बस्नु र उभिने तरिका बारम्बार परिवर्तन गरिरहन प्रेरित गर्छन् । गतिहीन हुने हाम्रो दायरा तोड्ने सामान्य तरिका भनेको उभिनु हो । कम गतिविधि गर्ने व्यक्तिका लागि खास गरी यसले स्वास्थ्यमा महत्त्वपूर्ण फाइदा पुग्छ । ह्वीलचेयर प्रयोग गर्ने वा चलायमान कम हुनेहरूका लागि भने विशेष किसिमको व्यायामहरू फाइदाकारी हुनसक्छ । तर तपाईंको दिनदिनै चिया बनाउनकै लागि उभिने, जिउ तन्काउने जस्ता सानै परिवर्तनले पनि बसिरहने बानीमा परिवर्तन गराउन सक्छ । (बीबीसीका एनाबेल बोर्नको रिपोर्ट)

# चाडपर्वको नाममा बेतिथि, साता अगावैदेखि मनाइन्छ शिवरात्री र होली !

अनुसा थापा

विद्यालय विद्यार्थीका लागि ज्ञानको मन्दिर हो । तर, महाशिवरात्रीको नाममा मिठाईमा भाङ हालेर विद्यालयले विद्यार्थीलाई खुवाउँछन् । स्कुल, कलेजको ड्रेसमा हुन्छन्, तर दिउँसै झ्याप भएर हिँडेको देखिन्छ । यता, फागू पूर्णिमा नआउँदै होली खेल्ने । ड्रेसमा कोर्ने, रंगमा लत्पतिएर हिँड्नेलगायतका दृश्य पनि अहिले नै देखिन थालेको छ।

अ भि भ ा व क ले आफ्ना सन्तानलाई विद्यालय पढ्न पठाएका हुन् । उनीहरुलाई चाडपर्वको विषयमा ज्ञान पनि चाहिन्छ। तर, चाडपर्व आउनु दुई साता अगावैदेखि यस्ता गतिविधि गर्नु भने ठीक होइन्। रमाइलोको नाममा स्कुलको नपढाउने बहाना हो । बाबुआमाको छोराछोरीको पढाइका लागि मोटो रकम खर्च गरेका हुन्छन् ।

तर, यस्ता क्रियाकलापले विद्यार्थीको पढाइमा ठूलो असर पर्छ। रमाइलो गर्नुपर्छ, तर ठीक समयमा । दुई साता अघिदेखि होली मनाउनुको औचित्य के ? विद्यालयमा आफ्ना सन्तानले के गरिरहेका छन् ? अभिभावकलाई चासो छैन् । पैसा तिरेपछि सकियो । जसले गर्दा विद्यार्थीहरु गलत ट्रयाकमा जान सक्छन् ।

रमाइलो गर्ने नाममा विद्यार्थी गलत बाटोमा गइरहेका छन् । रमाइलो गर्दा कुनै दुर्घटना भयो भने कसले जिम्मेवारी लिन्छ ? शिवरात्री मनाउने नाममा गाँजा, भाँङ, धतुरो खाएर झगडा गरेको र ज्यान गएको घटनाहरु धेरै छन्। यी पदार्थको सेवन गरेर सवारी चलाउँदा दुर्घटना भएर ज्यान गुमाएका उदाहरणहरु पनि नभएका होइनन् ।

शिवरात्रीमा आगो बाल्ने चलन छ । त्यही आगो घरभरि सल्किएकोलगायतका अप्रिय घटना पनि घटेका छन्। शिवरात्री र होलीको दोस्रो नाम नै मादक पदार्थ र लागूपदार्थ सेवन बनेको छ । मादक पदार्थ र लागूपदार्थ सेवन गर्ने, होहल्ला गर्ने कार्यले पछिल्लो समय प्राथमिकता पाएको छ ।

मादक पदार्थ र लागू पदार्थ सेवन गरेर तीव्र गतिमा सवारी चलाउँछन् । उनीहरुको ज्यान जान्छ । अर्कोतर्फ, झैझगडा एउटाको मृत्यु हुन्छ, अर्को जेल जान्छ। यस्तो अप्रिय घटना भएको देख्दादेख्दै विद्यालयले दुई साता अघिदेखि होली मनाउने अनुमति दिने हो ? विद्यार्थीले त रमाइलो गर्न खोजिहाल्छन् ।

तर, विद्यालय पनि पढाउन छोडेर त्यस्तो क्रियाकलाप गर्नमा आबद्ध भएको छ । नेपालीहरु रमाइलो गर्दा हजारौं रुपैयाँ खर्च गर्छन् । चाडबाड मनाउने भन्दै फजुलको खर्च गरिन्छ । यद्यपि, सामाजिक काममा भने नेपालीको ध्यान नै छैन् । भन्ने गरिन्छ,' थोपाथोपा गरेर समून्द्र बन्छ ।'

यसरी खर्च गर्ने पैसाले कतै पुल बनाउन सकिएला । भोकोलाई खाना खुवाउन सकिन्छ । विडम्बना, नेपालीहरु यस्तो सोच्दैनन् । रमाइलो गर्दा पैसा पानीझैं बगाएको उनीहरुलाई थाहा हुँदैन्, तर कसैलाई सहयोग गर्नुपर्यो भने दाँतबाट पसिना छुट्छ। विद्यालय विद्यार्थीको दोस्रो घर हो ।

घरपछि सबैभन्दा बढी समय विद्यार्थीले विद्यालयमा बिताउँछन् । तर, प्रिन्सिपल र शिक्षक नै विद्यार्थीको सामुन्ने चुरोट पिउँछन् । खैनी खाएर पढाउन आउँछन् । टिचरहरु मदिरापान गरेर कक्षामा आएको पनि बेलाबखत सुन्नमा आइरहेको हुन्छ। यता, शिक्षिकाहरुको कपाल पुरै रंगाएको हुन्छ ।

शरीरमा ट्याटु हानेका हुन्छन्। यस्ता शिक्षक शिक्षिकाले विद्यार्थीलाई के पढाउलान् ? विद्यार्थीले उनीहरुबाट के सिक्छन् ? विद्यार्थी भनेको भोलिका कर्णधार हुन्। विद्यालयमा जस्तो शिक्षा हासिल गर्यो, उनीहरु त्यस्तै बन्छन् । घरमा बुवाआमाभन्दा उनीहरु आफ्ना टिचरबाट बढी इन्स्पायर हुन्छन् ।

अहिलेका शिक्षक शिक्षिकाबाट विद्यार्थी चुरोट खैनी खान, कपाल रंग्याउन, ट्याटु हान्न इन्स्पायर भएका छन् । भोलि अधिकांश दर्शनका लागि पशुपतिनाथ मन्दिर पुग्छन् । त्यहाँ भएका नागा बाबाबाट आर्शिर्वाद लिन उनीहरु त्यहाँ गएका हुन्छन्। भेटी चढाउँछन्। सबैभन्दा ठूलो धर्म आफ्नो अभिभावकको सेवा गर्नु हो ।

घरमा बुढा भएका बुवाआमालाई चाँहि अपहेलना गर्छन्। खान दिँदैनन्, नुहाईधुहाई गर्दिदैनन् अनि आर्शिर्वाद माग्न पुग्छन् । नेपालीहरु ढोंग रच्न निकै जान्ने भए । देखाउनेका लागि मात्रै काम गर्छन् । एउटा उखान छ, चपाउने दाँत एउटा, देखाउने दाँत अर्को । यस्तै छ नेपालीको व्यवहार ।

नेपालीहरु न ऐनकानुन टेर्छन् न आफ्नो जिम्मेवारी बुझ्छन् । होली आफ्नो परिवारबीच मनाउने पर्व हो । तर, छतमा बसेर अर्कालाई पानी छ्यापिन्छ। छतबाट चिप्लिएर हरेक वर्ष एकाधले ज्यान गुमाइरहेका हुन्छन् । तैपनि पाठ सिक्दैनन् । योभन्दा विडम्बनापूर्ण कुरा के होला ? राज्यको काम समाजलाई सही दिशामा लैजानु हो ।

तर, सरकारले आफ्ना जनतालाई केही सिकाउन सकेन्। जनतालाई टिकटक चलाएर भ्याइनभ्याइ छ । टिकटकबाट नकारात्मकता फैलाएको छ । जनता त्यहाँ अल्मलेका छन् । सरकारलाई त यसले फाइदा नै भएको होला । काम नगर्ने सरकारले आफ्नो विरोध हुन्छ भनेरै टिकटक खोलेको हो ।

जनताले आफ्नो सबैभन्दा बढी समय त्यहाँ बिताउँछन् । पछिल्लो समय हरेक आकाशे पुलमा मान्छेहरु नाँचिरहेको देखिन्छ । काम नगर्ने, टिकटक बनाउने । जनता गलत बाटोमा गइरहेका छन्। उनीहरुले आफ्नो समय खेर फालिरहेका छन्। तर, सरकारलाई मतलब छैन् । उल्टै त्यस्तो काम गर्न उक्साइरहेको छ। सरकारले जनतालाई शिक्षित बनाउनै चाहेको छैन् । देशको ऐनकानुनबारे जानकारी नगराउने, अनि उनीहरुले गल्ती गरेपछि जेल कोच्ने । जनता सरकारका लागि भोट र नोटको माध्यम मात्र बनेको छ । जनतालाई कानुनको विषयमा जानकारी छैन् । सरकारले विद्यालयमा पनि सिकाएन् ।

जनता आफ्नै धुनमा छन् । हत्कडी लागेपछि संविधान र कानुन पढाएर के काम ? सरकार आफैं जाल थाप्छ अनि जनतालाई फसाउँछ । जनता पनि रमाइलोको नाममा फस्छन् । सरकार भन्छ, घरेलु मदिरा बेच्न पाइँदैन् । सार्वजनिक ठाउँमा धुम्रपान गर्न पाइँदैन् । गाँजा, धतुरो बेच्न पाइन्छ ।

शरीरलाई असर पुर्याउने केमिकल भएको रंग, कालो मोबिलहरु बेच्न पाइँदैन् । तर, यहाँ त कानुनले बन्देज लगाएको सामानहरु खुलेआम रुपमा बिक्री भइरहेको छ । सरकारले जहिलेपनि जनताको सुरक्षा गर्छौं भन्छ । तर, जनता मारेर सरकारले कर उठाउँछ। सरकार नौटंकी भएपछि जनताले त्यो सिक्नु स्वाभाविकै हो ।

जो मान्छे गरिब परिवारमा जन्मियो, ऊ त पढाइबाट वञ्चित हुन्छ । उसलाई कानुनबारे थाहा हुँदैन् । तर, धनी बाउका छोराछोरीलाई पनि देशको ऐनकानुनको विषयमा रत्तिभर पनि जानकारी छैन्। बेतिथि आफै निम्तिँदैन्, व्यक्तिले निम्त्याउने हो । बेतिथि निम्तिएपछि राज्यले त्यसलाई नियन्त्रण गर्ने नाममा कानुन लगाउँछ।

बिग्रिसकेपछि कानुन कार्यान्वयन गरेर के फाइदा ? मरेपछि आँखाबाट आँशु झारेर के गर्ने ? बिग्रिसकेपछि जेलमा लगेर थुनेर केही हुन्छ ? राज्य र अभिभावक चनाखो हुने हो भने सायद त्यो अवस्था देख्नै पर्दैन्थ्यो । चाडबाड मनाउने नाममा केही अप्रिय घटना नघटोस् । होली खेल्ने नाममा कसैको ज्यान नजाओस् ।

सरकारले यसका लागि आवश्यक तयारी गरोस् । सचेतना फैलाउने हो कि अन्य विधि अप्नाउने हो, राज्यको हातमा छ । अभिभावक पनि यसमा जिम्मेवार बनिदिनुपर्यो । सरकारले ऐनकानुन बनाउन सक्छ तर जनता जन्माउन सक्छ। एक जनतालाई केही भयो भने राज्य र अभिभावकलाई ठूलो क्षति हुन्छ। त्यसैले सचेत बनौं ।

# दुबईमा मधेशी एकता समाजको होली उत्सव र अन्तरक्रिया सम्पन्न

काठमाडौं। नेपालका प्रवासी मधेशीहरुको अन्तर्राष्ट्रिय छाता संगठन मधेशी एकता समाजले संयुक्त अरब इमिरेट्सको दुबईमा यस वर्षको होली पर्व मनाएको छ । एकता समाजको युएई शाखाले आइतबार दुबईको बरदुबईमा भव्यताका साथ होली महोत्सव मनाएको हो । पूर्व उपप्रधानमन्त्री एवं जसपा नेपालका अध्यक्ष उपेन्द्र यादवको प्रमुख आतिथ्यता रहेको कार्यक्रममा मधेशी समुदायका ७ सय जनाभन्दा बढी मानिस सहभागी थिए । त्यस अवसरमा उनीहरुले एकअर्कालाई रंग र अबिर दलेर होलीको शुभकामना आदानप्रदान गरेका थिए ।

कार्यक्रममा आबुधाबीस्थित नेपाली दूतावासका राजदूत तेज बहादुर क्षेत्री, मधेशी एकता समाजका संस्थापक तथा अन्तर्राष्ट्रिय समिति अध्यक्ष डा. रविन्द्र कुमार यादव, दूतावासका तृतीय सचिव विमलेश मिश्र, श्रम सहचारी पंकज लाभ कर्ण, मधेशी एकता समाज नेपालका संयोजक डा. बबीसिंह यादव, अन्तर्राष्ट्रिय समितिका महासचिव मुकेश झा, एनआरएनए यूएईका महासचिव भुवन कुमार वाग्ले, नेपाल जनप्रगतिशील मञ्च यूएईका अध्यक्ष लक्ष्मण खनाल, नेपाल पत्रकार महासंघ यूएईका अध्यक्ष मेघराज सापकोटालगायतको उपस्थिति थियो ।

समाजका महासचिव सुरेश यादव र सहअध्यक्ष एवं प्रवक्ता शैलेन्द्र रायले उद्घाटन समारोहको सञ्चालन गरेका थिए। यस्तै सांस्कृतिक कार्यक्रमको सञ्चालन भोला पासवान र मनोज परदेशीले गरेका थिए । त्यस अवसरमा सांस्कृतिक कार्यक्रम, नाचगान, होली गीत, जोगिरा गायन र विभिन्न परिकारका खानेकुराको व्यवस्था गरिएको थियो । नेपालबाट गएका चर्चित कलाकार रविराज साह र शोभा पासवानले आफ्नो प्रस्तुतिले दर्शकलाई मनोरञ्जन प्रदान गरेका थिए। स्थानीय कलाकार भोला पासवान, ईशा, अनाया, भिरु यादव, स्लोन्ली एन्जल र नेपाली बोइज ग्रुपले पनि आकर्षक प्रस्तुति दिएका थिए । त्यस्तै युएईमा रहेका दर्जनौं नेपाली कालाकारले आफ्ना सांस्कृतिक प्रस्तुति दिएका थिए ।

उद्घाटन सत्रमा पूर्वउपप्रधानमन्त्री उपेन्द्र यादव, राजदुत तेजबहादुर क्षेत्री र डा. रविन्द्र कुमार यादवले आफ्नो मन्तव्य राखेका थिए । नेपालमा होली पर्व मार्च १४ मा मनाइने भएपनि रमजानको पवित्र महिना फर वरी २८ देखि मार्च ३० सम्म चल्ने भएकाले दुबईमा होली समारोह रमजानअगावै अर्थात् फरवरी २३ तारिखमा आयोजना गरिएको हो।

यसअघि मधेश एकता समाज यूएईले दुबईको अल खैल मलस्थित सयपत्री रेस्टुरेन्टमा अन्तरक्रिया कार्यक्रम आयोजना गरेको थियो । कार्यक्रममा पूर्वउपप्रधानमन्त्री तथा जसपा नेपालका अध्यक्ष उपेन्द्र यादवले प्रमुख अतिथिको रूपमा आफ्ना धारणाहरु राखेको थियो । पूर्वउपप्रधानमन्त्री यादवले वैदेशिक रोजगारीमा रहेका नेपालीहरुका लागि नीतिगत सुधारमा सहयोग गर्ने प्रतिबद्धता व्यक्त गरे । प्रवासी नेपालीहरूले नेपालको विकासमा गरेको योगदानबारे चर्चा गर्दै नेता यादवले प्रवासी नेपाली कामदारका समस्या समाधान गर्न नेपाल सरकार र अधिकारीहरूसँग सहकार्य गर्ने प्रतिबद्धता व्यक्त गरे। उनले नेपाल सरकार ठूलो ऋणमा रहेको, वर्तमान अर्थतन्त्र रेमिट्यान्समा आधारित रहेको तर सरकारले रेमिट्यान्स पठाउनेहरूप्रति न्याय नगरेको धारणा राखे ।

आफ्नो नेतृत्वमा भएको मधेश आन्दोलनको स्मरण गर्दै यादवले त्यसबेला सबै मधेशी एकजुट भएको र त्यसकै परिणामस्वरूप नेपालमा अहिलेको राजनीतिक व्यवस्था आएको धारणा राख्दै मधेशमा शिक्षा, स्वास्थ्य, रोजगारी र व्यवसायको अवस्था सुधारका लागि पहल भइरहेको र अझै गर्नुपर्ने कामहरू धेरै बाँकी रहेको बताए ।

कार्यक्रमको प्रारम्भ गर्दै मधेशी एकता समाजका संस्थापक तथा अन्तर्राष्ट्रिय समिति अध्यक्ष डा. रविन्द्र कुमार यादवले संस्थाको उद्देश्य, हालसम्मका उपलब्धिहरू र आगामी योजनाहरूबारे जानकारी गराएको थियो । विश्वभर छरिएका मधेशी समुदायका अधिकार र विकासका लागि तथा नेपाली प्रवासीहरूका श्रम अधिकार, शिक्षा, स्वास्थ्य र नीतिगत सुधारका लागि कार्य गर्ने प्रतिबद्धता डा. यादवले व्यक्त गरे । सो अवसरमा मधेशी एकता समाजको नेपाल च्याप्टरकी संयोजक डा. बबिसिंह यादवले पनि आफ्नो धारणा राखेको थियो ।

# म्यानमार र नेपालको इन्टरनेशनल वुमन्स च्याम्पियनसिप उपाधिमाथि दाबी




काठमाडौं । इन्टरनेशनल वुमन्स च्याम्पियनसिपको उपाधिका लागि घरेलु टोली नेपाल र म्यानमारबीच बुधबार फाइनल खेल हुँदैछ ।

दुवै टोलीले फाइनलका लागि तयार भएको बताएका छन् । मंगलबार भएको प्रि म्याच प्रेस कन्फ्रेन्समा दुवै टोलीले फाइनलका लागि तयार रहेको र उपाधि जित्ने दाबी गरेका छन् ।

नेपालका मुख्य प्रशिक्षक राजेन्द्र तामाङले यसअघिका तीन खेल राम्रो भएको र फाइनलका लागि तयार भएको बताए । 'तीन खेल खेल्यौं, राम्रो भयो । अब फाइनलको तयारी हुँदैछ' उनले भने ।

यस्तै कप्तान एन्जिला तुम्बापो सुब्बाले पनि अहिलेसम्म सबैले राम्रो खेलेको र अब उपाधिका लागि फाइनलमा फाइट गर्ने बताइन् । 'समग्रमा सबै खेल राम्रो भयो । सबैले राम्रो खेल्नुभयो । अहिलेसम्म सिल्भर मेडलमा छौं । भोलि गोल्डका लागि फाइट गर्नेछौं' उनले भनिन्, 'दुवै टिम उपाधिका लागि खेल्छन् । जसले राम्रो खेल्छ उसैले जित्ने हो । हामी हाम्रो बेस्ट दिनेछौं ।'

म्यानमारका प्रशिक्षक र कप्तानले पनि फाइनलका लागि तयार भएको बताए । 'फाइनलका लागि तयार छौं, आशा छ भोलि राम्रो खेल हुनेछ' म्यानमारका प्रशिक्षक तेत्सुको युकीले भने ।

'हाम्रो खेलाडीहरू फाइनलका लागि तयार छन् । फाइनलमा राम्रो खेल्ने आशा छ' म्यानमारका कप्तान वेन थेइङ्गी तुनले भनिन् ।

फाइनल यात्रा

चार राष्ट्र सम्मिलित प्रतियोगितामा नेपाल र म्यानमार अपराजित रहँदै फाइनल पुगेका हुन् । दुवैले तीमध्ये दुई खेल जित्दा एक बराबरी खेल्दै समान ७ अंक जोडेका थिए । गोलअन्तरमा म्यानमार पहिलो र नेपाल दोस्रो हुँदै फाइनल पुगेको हो ।

नेपालले कीर्गिस्तान र लेबनानलाई समान १-० ले पराजित गरेको थियो । म्यानमारले लेबनानलाई ३-१ र कीर्गिस्तानलाई ५-० ले हराएको थियो । नेपाल र म्यानमारबीच भएको लिगको अन्तिम खेल २-२ को बराबरीमा सकिएको थियो ।

नेपालले तीन खेलमा जम्मा ४ गोल गरेमो छ भने म्यानमारले १० गोल गरेको छ ।

हेड टु हेड

नेपाल र म्यानमारबीच अहिलेसम्म चार खेल भएको छ, जसमा नेपाल जितविहिन छ । म्यानमार दुई खेलमा विजयी हुँदा दुई खेल बराबरीमा सकिएको थियो । यसै प्रतियोगिताको लिग चरणमा नेपाल

# च्याम्पियन्स ट्रफी : समूह चरणबाटै टुंगियो पाकिस्तान र बंगलादेशको यात्रा




काठमाडौं । आयोजक पाकिस्तान आईसीसी च्याम्पियन्स ट्रफी प्रतियोगिताको छैटौं दिनमै बाहिरिएको छ । समूह 'ए' अन्तर्गत सोमबार भएको खेलमा न्युजिल्याण्डले बंगलादेशलाई ५ विकेटले पराजित गरेसँगै पाकिस्तान बाहिरिएको हो । यससँगै बंगलादेशको यात्रा पनि समूह चरणमै टुंगिएको छ ।

रावलपिण्डीमा बंगलादेशले दिएको २३७ रनको लक्ष्य न्युजिल्यान्डले ४६.१ ओभरमा ५ विकेट गुमाएर पूरा गर्‍यो । न्युजिल्यान्डका रचिन रविन्द्रले शतक बनाए । समूह 'ए' भारत, पाकिस्तान, न्यूजिल्याण्ड र बंगलादेशसहित ४ टोली छन् । समूह चरणमा एउटा टोलीले ३ खेल खेल्नेछ । भारत र न्युजिल्याण्डले २-२ खेल जितेर ४-४ अंक जोडेका छन् । दुवै सेमिफाइनलमा पुगेका छन् । अब दुवै टोलीले एकअर्कासँग अन्तिम खेल खेल्नेछन्, जसमा जित्ने टोली समूह 'ए' को शीर्ष स्थानमा रहनेछ। पाकिस्तान र बंगलादेश २-२ खेल पराजित भएका छन्। अब दुवैले एकअर्काविरुद्ध २७ फेब्रुअरीमा खेल्नेछन् । यो जित्ने टोलीको मात्र २ अंक हुनेछ, जुन भारत र न्यूजिल्याण्डभन्दा कम हुनेछ ।

समूहबाट २ टोली मात्र सेमिफाइनल पुग्नेछन् । समूह 'ए' बाट भारत र न्युजिल्याण्ड अन्तिम ४ मा प्रवेश गरेका छन् । समूह बी बाट अष्ट्रेलिया,

## साना....

पाइरहेका छन् । गरिखाने वर्गको जीवनस्तर उठ्न सकेको छैन । यी विषयमा कम्युनिस्ट पार्टीका नेता तथा कार्यकर्ताहरु मौन छन् । तिनको मुख्य रणनीति निर्वाचन र जित मात्र रहेको छ । सरकारमा गएर नै जनताको समस्याको समाधान हुने रतानमा छन् । अहिले अलग बनेका कम्युनिस्ट नेताहरुबीच पानी बाराबारको स्थिति छ । यस्तोमा टुटेफुटेका कम्युनिष्टहरु एउटै प्रकारको उद्देश्यलाई पनि फरक नाम दिएर गाउँतिर जाँदैछन् । कुन दलको कस्तो छ अभियान ? यहाँ हामी यहीबारे चर्चा गर्दैछौं ।

सरकारको नेतृत्व गरिरहेको एमाले ७८ सिटसहित संसदमा दोस्रो दलका रुपमा छ । एमाले अध्यक्ष केपी शर्मा ओली प्रधानमन्त्री छन् । उनले 'मिसन ०८४' अभियान थालेको ०७९ को निर्वाचनबाटै हो । एकल बहुमतसहित पहिलो पार्टी बन्ने भन्दै एमालेले विभिन्न बहानामा गाउँ अभियान चलाइरहेको छ । कहिले नेतालाई काठमाडौंमा बोलाएर पढाउने, कहिले जिल्ला गएर प्रशिक्षण दिने काममा एमाले सक्रिय छ । पछिल्लो समय एमाले उपमहासचिव प्रदीप ज्ञवाली जिल्ला, जिल्लामा प्रशिक्षण दिन व्यस्त छन् । एमालेले निर्णायक राष्ट्रिय शक्ति बनाउन भन्दै यही माघदेखि चैतसम्म तीन महिने वडाकेन्द्रित अभियान गरिरहेको छ । जसलाई एमालेले जरा केन्द्रित अभियानको नाम दिएको छ ।

सबै जिल्लामा यो अभियान चलिरहेको एमाले सचिव योगेश भट्टराई बताउँछन् । एमालेले सत्ताको बागडोर सम्हालेर पनि जनताका समस्या समाधानमा ध्यान दिन सकेको छैन । निर्वाचनको एक वर्षबाहेक एमाले सत्तामै छ । तर, आशा देखाएर चुनाव लडेको एमालेप्रति जनताको निराशा चुलिँदो छ । एमालेले ०७९ को निर्वाचनलगत्तै फागुन ५ गतेबाट दुई महिने 'मिसन ग्रासरुट' अभियान चलाएको थियो । तर ०७९ गत साल वैशाख १० गते बारा १, चितवन २ र तनहुँ १ मा भएको उपनिर्वाचनमा एमालेले निराश भयो ।

त्यसपछि एमालेले ०८० मंसिर १४ देखि पुस २ गतेसम्म 'झुलाघाट-चिवाभञ्ज्याङ समृद्धिका लागि सङ्कल्प यात्रा' चलायो । उक्त अभियानमा एमाले मध्यपहाडका २६ जिल्ला र अन्य ११ सहित ३८ जिल्ला पुग्यो । त्यसबेला प्रतिपक्षी एमालेले २६ जिल्लाका समस्याबारे प्रतिवेदन बनायो । तत्कालीन प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डलाई बुझाएको प्रतिवेदन आफैं कार्यान्वयन गर्ने तहमा एमाले छ । आफैंले बनाएको प्रतिवेदनको अवस्थाबारे एमालेले नजरअन्दाज गरेर बसेको छ ।

पछिल्लो पटक मंसिर १६ गते सरकारमै भएका बेला ४२ वटा स्थानीय तहको उपनिर्वाचनमा एमालेले ८ स्थानमा मात्रै जित्यो । कांग्रेसले १७ र माओवादी केन्द्रले १० ठाउँमा जिते । त्यसपछि अहिले जराकेन्द्रित अभियानका नाममा एमाले गाउँ पसेको छ । अहिले एमालेका तल्लो तहका कार्यकर्तामा छटपटी छ । असार ३१ गते कांग्रेससँग मिलेर सरकार बनाएयता एमाले र ओली दुवैको लोकप्रियताको ग्राफ निरन्तर ओरालोतिर छ । अभियानको नतिजा ०८४ को निर्वाचनमा देखिने छ ।

त्यस्तै नेकपा माओवादी केन्द्र अहिले संसदमा प्रमुख प्रतिपक्षी दलको रुपमा रहेको छ । कम्युनिस्ट पार्टीमा यो संसद्को दोस्रो ठूलो हो । प्रतिनिधि सभामा ३२ सिट छ । ०७९ को निर्वाचनपछि यसै पार्टीबाट अध्यक्ष पुष्पकमल दाहाल प्रचण्ड प्रधानमन्त्री बनेका थिए । तर, असार ३० बाट ओली छन् । ०६४ मा पहिलो पटक संसदीय राजनीतिमा आएको माओवादी पहिलो दल भएको थियो । अहिले त्यही तयारीमा लागेको महासचिव देव गुरुङ बताउँछन् ।

०७९ को निर्वाचनपछि ०८० भदौ १७ देखि चार महिने 'जनतासँग माओवादी विशेष रूपान्तरण अभियान' चलाइएको थियो । विधान सम्मेलनअघि पार्टीको स्वरुपबारे जनतासँग छलफल गर्ने भन्दै अभियान चलायो । त्यसबेला सरकारमा भएको माओवादीसँग कार्यकर्ताका थुप्रै गुनासा थिए । सत्तामुखी भएको, सशस्त्र द्वन्द्वपीडितलाई बेवास्ता गरेको, सहिद परिवारलाई अन्देखा गरेको लगायत आक्रोश फागुन १ देखि काठमाडौंको प्रज्ञा भवनमा भएको विधान सम्मेलनमा उठेका थिए ।

जनतासँग माओवादी विशेष अभियानका क्रममा ६ हजार ७ सय वडामा पुगेर माओवादीले चार महिनामा निर्मम समीक्षा गर्ने भनेको थियो । तर त्यो अभियान सफल हुन सकेन । माओवादीसँग कार्यकर्ताको तीव्र असन्तुष्टि थियो । तर ०८१ असारबाट सरकार छाडेपछि माओवादी नेताहरू जिल्ला र प्रदेश भ्रमणमा छन् ।

अध्यक्ष प्रचण्ड पनि देश दैडाहामा विभिन्न जिल्ला पुगे । उनको त्यो यात्रा जारी छ । ०७९ पछि गत वैशाख १० गते बारा १, चितवन २ र तनहुँ १ मा भएको उपनिर्वाचनमा माओवादी कमजोर देखियो । प्रतिपक्षीमा भएर गत मंसिर १६ मा भएको स्थानीय तह उपनिर्वाचनमा १० स्थानमा जित निकाल्यो । उपनिर्वाचन भएका ४२ मध्ये एक स्थानमा माओवादीका उम्मेदवार निर्विरोध भए । माओवादीले आधार इलाकामा धक्का बेहोरेको छ । ०७९ मा जितेका आधार इलाकाअन्तर्गत रुकुम, रोल्पा, जाजरकोटका वडाहरू माओवादीले गुमाएको छ । पार्टीलाई रिकभर गर्न माओवादीले 'तराई-मधेस जागरण अभियान' अन्तर्गत १ महिनासम्म सञ्चालन गर्न लागेको छ । फागुन १२ गतेदेखि चैत ७ गतेसम्म तराईका जिल्लाहरूमा अभियान चलाउने निर्णय भएको जानकारी पार्टी सचिव देवेन्द्र पौडेलले दिए । फागुन १२ गते झापाको कचनकबलबाट सुरु हुने छ । अभियानको उद्घाटन कचनकवलस्थित बनियानी बजारमा हुँदै छ । समापन चैत्र ७ गते कञ्चनपुरमा हुने छ ।

'तराई-मधेस जागरण अभियान टोलीमा अध्यक्ष प्रचण्ड, वरिष्ठ उपाध्यक्ष नारायणकाजी श्रेष्ठ, उपलब्ध उपाध्यक्षहरू, महासचिव देव गुरुङ र उप-महासचिवहरू हुने छन् । माओवादीको यो टोलीमा सम्बन्धित जिल्ला र प्रदेशका नेता तथा सांस्कृतिक टोली हुने छ । यस्तै पूर्वउपराष्ट्रपति नन्दबहादुर पुन पनि जोडिँदैछन् ।

माओवादीले २०८२ वैशाखमा मध्यपहाडी लोकमार्ग केन्द्रित पूर्व-पश्चिम जागरण अभियान सञ्चालन गर्ने योजना बनाएको छ । त्यस्तै नेकपा एमालेबाट टुक्रिएको नेकपा एकीकृत समाजवादी पार्टी पनि जनतामाझ जाने भएको छ । २०७८ भदौ २ गते निर्वाचन आयोग दर्ता भएको यो कम्युनिस्ट पार्टीमा तेस्रो ठूलो हो । यसको प्रतिनिधि सभामा १० सिट छ । पार्टी स्थापनाको ३ वर्ष पुगिसक्दा पनि यसले प्रभाव पार्न सकेको छैन । त्यसकारण अब एकीकृत समाजवादीले आन्दोलनद्वारा पार्टी निर्माण योजना बनाएर गाउँ जाने भएको छ । गत वर्ष तीन क्षेत्रको प्रतिनिधि सभा उपनिर्वाचनमा पार्टीले उत्साहजनक मत ल्याउन सकेन ।

तर उसले गत मंसिर १६ गतेको स्थानीय तह उपनिर्वाचनमा १ वडा मात्र जितेको छ । पछिल्लो पटक पार्टीको १० औं महाधिवेशनपछि एकीकृत समाजवादीमा नेताहरुबीच मतभेद बढेको छ । समाजवादीका महासचिव घनश्याम भुसालको संयोजकत्वमा आन्दोलनद्वारा पार्टी निमार्ण योजना बनाइएको छ । राजनीतिक परीक्षाको सामना गरिरहेको समाजवादीले फागुन ८, ९ गते बसेको केन्द्रीय समिति बैठकमा पनि यसबारे चर्चा गरेको छ । कार्ययोजनाअन्तर्गत समाजवादीले चैत १५ गतेभित्र केन्द्रीय तहमा सुझाव संकलन र विभिन्न कार्यक्रम गर्ने योजना बनाएको छ ।

पार्टी निर्माणसम्बन्धी कार्ययोजनामा सबै स्थानीय तह, प्रदेशबाट सुझाव लिएर चैत २० गते सरकारलाई मागपत्र पेस गर्ने योजना छ । यस्तै ०८२ वैशाख २० गते प्रदेश सरकार र पालिकामा आफ्ना मागहरू पेस गर्ने योजना एकीकृत समाजवादीको छ । त्यसपछि जेठ १० गते काठमाडौंमा प्रदर्शन गर्ने भुसालको योजना छ । जेठ तेस्रो हप्ता सरकारले ल्याउने बजेट र आफ्ना मागहरूबारे जानकारी गराउने योजना छ ।

संसदीय राजनीतिमा सहभागी भएका नभएका साना कम्युनिस्ट पार्टी पनि जनतामाझ जाँदैछन् । नेत्रविक्रम चन्द विप्लव नेतृत्वको नेकपाले पनि देशभर कार्यकर्ता र जनतासँग भेटघाट गरिरहेको छ । भर्खरै पहिलो महाधिवेशन गरेको डा. बाबुराम भट्टराई नेतृत्वको नेपाल समाजवादी पार्टी (नयाँ शक्ति) पनि जनतामाझ जाने योजनामा छ । यसको निर्णय शनिबार र आइतबार बस्ने बैठकले गर्ने नेता नेत्रप्रसाद चापागाईंले बताए ।

यता, मोहन वैद्य किरण नेतृत्वको क्रान्तिकारी कम्युनिस्ट पार्टीले पनि देशभर अभियान चलाउने योजना अगाडि सारिसकेको छ । यसको तयारीमा नेता कार्यकर्ता जुटेका छन् । प्रभु साहको आम जनता पार्टी मधेस प्रदेशकेन्द्रित पार्टी प्रचारमा छ । एमालेबाट अलग भएर २ महिनाबाट डा. भीम रावल देश दौडाहामा छन् । उनी ०८४ सम्म नयाँ पार्टी खोल्ने योजनामा मातृभूमि जागरण अभियान चलाइरहेका छन् । यस्तै एमालेमा जान ठिक्क परेका वामदेव गौतम पनि 'नेकपा एकता राष्ट्रिय अभियान' लिएर देश घुम्ने योजनामा छन् । तर कम्युनिस्ट एक हुने कुरा भने असम्भव जस्तै छ । त्यसैले एक्ला एक्लै दौड चलिरहेको छ । उता विप्लव, नेसपा, क्रान्तिकारी कम्युनिस्ट पार्टी ०८४ को निर्वाचनबाट सदन छिर्ने बाटो बनाउन जुटेका छन् । त्यस्तै संघीय संसदमा एक सिट भएको नेपाल मजदुर किसान पार्टी आठौ महाधिवेशनको तयारी मार्फत जनतामा जाने तयारीमा रहेको छ । पार्टी अध्यक्ष नारायणमान बिजुक्छैंको नेतृत्वमा रहेको पार्टीको नेतृत्व आगामी दिनमा के हुने हो भन्ने आम जिज्ञासा रहेको छ ।

## शनिबारसम्म...

महोत्सवमा स्थानीय सहभागिता गर्न वडाले वडास्तरीय छलफल आयोजना गरिसकेको छ । यस्तै महोत्सव प्रवर्धनका लागि साइकल ऱ्यालीलगागत कार्यक्रम सम्पन्न गरेको छ । कार्यक्रमको उद्घाटन काठमाडौं महानगरपालिकाका नगर प्रमुख बालेन शाहले एक भव्य कार्यक्रमका बिच गरेको थिए । कार्यक्रम आगामी फागुन १७ गते शनिवारसम्म चल्ने छ ।

## प्रेस सेन्टरको...

देवान, लिला माया ठटाल र रोशन कुमार सिंह निर्वाचित भएका छन ।

त्यस्तै अनुशासन समितिमा संयोजक रामशरण काफ्ले र सदस्यमा शिवहरि खनाल छन् भने लेखा समितिमा सुधीर पन्थीको संयोजकत्वमा सदस्यहरु शिवप्रसाद बन्जारा र शिवराज ढकाल रहेका छन् ।

निर्वाचन प्रक्रियामा सिङ्गो कार्यसमिति नै निर्विरोध निर्वाचित भएको निवर्तमान अध्यक्ष नवराज दाहालले जानकारी दिए ।

## नेपालका...

हुनेहरूको नाम काट्न लगाउँदा सहभागी हुनबाट वञ्चित हुनुपरेको ती संस्थाका प्रतिनिधिहरूले बताए ।

ब्लु डायमन्डका संस्थापक एवं एसियाकै पहिलो समलिङ्गी सभासद् सुनिलबाबु पन्तको बहिर्गमन पछि ब्लु डायमन्ड कब्जामा लिएको स्वार्थ समूहले सम्मेलनमा सहभागी सुनिश्चित भएका अरू संस्थाका प्रतिनिधिको नाम हटाउन लगाएको पुष्टि भएको छ ।

नेपालको संविधानमा यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यक समुदायको संवैधानिक अधिकार सुनिश्चित गर्न पहल गरेका पन्तलाई समेत इल्गा एसियाले सम्मेलनमा आमन्त्रण नगरेको पाइएको छ । पन्तले ब्लु डायमन्ड स्थापना गर्दा सदस्य बस्न नमानेकाहरुले नै अहिले रजगज गर्दा पन्त मात्रै होइन, उस्तै प्रकृतिको प्रभावकारी अभियान चलाउन थालेको इल्गाकै सदस्य मायाको पहिचान नेपाल सम्मेलनमा सहभागी हुन पाएन ।

पन्तले नेपाल सरकारविरुद्ध यौनिक तथा लैङ्गिक अल्पसङ्ख्यकको पहिचान सहितको अधिकार, वैवाहिक अधिकार र विभेदरहित कानुन खारेज गर्न दायर गरेको रिटमा सर्वोच्च अदालतले निर्देशनात्मक आदेश दिएको थियो । जुन आदेश यो समुदायको लागि कोशेढुंगा बनेको छ । विश्वका विभिन्न देशले यो समुदायको अधिकारका लागि पन्तको रिटमा सर्वोच्चले दिएको आदेशलाई नजिरको रूपमा लिने गरेका छन् । तर, इल्गा एसियाले महत्त्वपूर्ण योगदान गर्ने पन्तको भूमिकालाई नजरअन्दाज गरेको छ ।

पुरुष र महिला भन्दा भिन्न पहिचान भएका व्यक्तिको अधिकारको वकालत गर्दै आएको ब्लु डायमन्ड हाल पुरुष जन्मिएकाले महिला र महिला जन्मिएकालाई पुरुषको पहिचान दिनुपर्ने लबिङमा लागेको छ । जसको भिन्न पहिचानका व्यक्तिहरूले आलोचना गर्दै आएका छन् ।

लिङ्ग परिवर्तनका लागि हर्मोन खान उक्साउने काममा लागेको ब्लु डायमन्डको समुदायले विरोध गर्दै आएका छन् । विरोध गर्नेलाई नजिकै पर्न नदिने ब्लु डायमन्डको स्वार्थ समूहले सहभागिता सुनिश्चित गरिएको संस्थाका प्रतिनिधिलाई सम्मेलनमा सहभागी हुनबाट वञ्चित गराएको छ ।

नेपालमा पहिलो पटक समलिङ्गी विवाह कानुनी रूपमा दर्ता गर्न सफल भएको मायाको पहिचान नेपाललाई सहभागी गराउँदा दातृ निकायको अनुदान सहयोग भोजभतेर र रामरमाइलोमा सकेको ब्लु डायमन्डले इल्गा एसियालाई समेत आफ्नो मुट्ठीमा पारेर नेपालमा निरन्तर लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक समुदायको वकालत गर्ने अभियानकर्मीहरूसँग बदलाभाव राखेको देखिएको छ ।

सम्मेलनको स्थानीय आयोजक ब्लु डायमन्डका अनुसार काठमाडौंको होटेल सोल्टीमा सुरु सम्मेलनमा १५० बढी देशका ६०० भन्दा बढी सहभागी छन् । सम्मेलनको नारा विविधतामा गतिशीलता : न्यायसङ्गत, समावेशी, र दिगो एसियाको लागि एकता भन्ने राखिएको छ । अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले सहायता बन्द गर्ने र दुई लिङ्ग (पुरुष र महिला) लाई मात्रै मान्यता दिने घोषणा गरेकै बेला करोडौं खर्च गरेर सम्मेलन आयोजना गरिएको छ ।

पहिचान मिडियाले इल्गा एसियालाई सम्मेलनबारे जिज्ञासा राख्दा एजेन्डा तयार भएपछि जानकारी गराउने बताएको थियो । तर, सम्मेलन सुरु हुँदा मिडियालाई नै प्रवेश निषेध गरेको छ । सम्मेलन स्थलमा सञ्चारकर्मीलाई प्रवेश गर्न दिइएको छैन ।

सहयोग रोक्ने ट्रम्पको घोषणालाई विश्वव्यापी रूपमा सीमान्तकृत समुदायहरूको अस्तित्व र मर्यादामा प्रत्यक्ष आक्रमण भनेको इल्गा एसिया आफैँले भने आफ्नै सदस्य संस्थाहरूका समुदायमाथि पक्षपातपूर्ण व्यवहार गरेको अभियानकर्मी मधु केसी बताउँछन् । यस्तो अवस्थामा एसियाभरका विदेशीलाई ल्याएर सम्मेलन गर्नुको औचित्य इल्गा एसियाले पुष्टि गर्नुपर्ने माग अभियानकर्मीहरूले गरेका छन्। दातृ निकायले यस्ता भोजभतेर र रामरमाइलोमा खर्च गर्न बन्द गर्नुपर्ने माग समेत अभियानकर्मीहरूको छ।

यो सम्मेलनको उपलब्धि के हो? यसले के फाइदा गर्छ? यसको जवाफ इल्गा एसिया र ब्लु डायमन्ड सोसाइटीले सम्पूर्ण समुदायलाई दिनु पर्ने उनले बताए ।

इल्गा एसियाले नयाँ नेतृत्व समेत चयन गर्ने भनिएको छ । नेपालका सीमित टाठाबाठा भनाउँदाहरुलाई मात्र सहभागी गराएर सदस्यहरूलाई नै मताधिकारबाट वञ्चित गराउने काममा इल्गा र ब्लु डायमन्ड हात धोएर लागेको पाइएको छ ।

## मातृभाषा...

तथा प्रशिक्षक उदयराज आले ज्यादै उत्साहित भएको बताउनु हुन्छ । किनकि ज्ञानीमैया र कमला खत्रीबाट सिकेको कुसुन्डा भाषामा आफैंले प्रशिक्षण दिएका बालबालिकाले तयार पारेका सिर्जनात्मक पुस्तिकाहरू प्रकाशित भएका छन् । यही २५औं अन्तर र्ाष्ट्रिय मातृभाषा दिवसका अवसरमा काठमाडौंमा कुसुन्डा भाषाका ती १० वटा पुस्तक सामग्री सार्वजनिक हुँदैछन् । ती पुस्तकमा कुसुन्डा जातिको जीवनशैली, खानपान, चिठीपत्र, निबन्ध, कथा आदि विषय समेटिएका छन् । भाषा आयोगले समेत कुसुन्डा भाषाको पाठ्यसामग्री प्रकाशित गरेको छ । यसअघि कुसुन्डा भाषाको व्याकरण प्रकाशित छ । 'सोजक' नामक पुस्तकसँगै उदयराज र कमला खत्रीबीचको अडियो संवादसमेत निर्माण भएको छ । तथ्यांकले कुसुन्डा भाषा बोल्नेको जनसंख्या २३ जनामात्र देखाएका छ ।

यसैगरी भाषा आयोगले दुरा भाषाको उत्थानमा केही पहल गर्दै आएको छ । दुराको बसोबास क्षेत्र तनहुँ, चितवनलगायत ठाउँमा भाषा कार्यशालाको आयोजना भएको छ । दुरा भाषाविद् मुक्तिनाथ घिमिरे दुरा भाषा उत्थानका लागि आजीवन समर्पित हुँदै आउनु भएको छ । उहाँकै प्रशिक्षणमा अहिले पाठ्यक्रम तथा पाठ्यपुस्तकहरू निर्माण भएका छन् । म्यासेन्जर ग्रुपमा दुरा भाषाको समूहगत प्रशिक्षण सुचारु छ । शिक्षिका कमला दुराले प्रशिक्षण दिनु हुन्छ ।

'पहिले भाषाविद्ले दुरा भाषा छैन भन्दै आए । अहिल दुरा भाषाको प्रगति भएको छ,' दुरा सेवा समाजका पूर्वअध्यक्ष तथा मातृभाषा अभियन्ता देवबहादुर दुरा भन्नुहुन्छ, 'पहिले अनुसन्धानमात्र थियो । अहिले समुदायमा मातृभाषामा बोलीचाली व्यवहार हुन थालेको छ । बालबच्चा बोल्छन् । अन्तर्राष्ट्रिय मातृभाषा दिवसमा निरन्तर रूपमा दुरा भाषाको कविता वाचन गर्दै आएको छु । साहित्य सिर्जना अघि बढेको छ । दुरा भाषा बच्यो । हाम्रो पहिचान खुल्यो भनेर उत्साहित छौं । यो भाषा यहाँसम्म ल्याइपुऱ्याउन मुक्तिनाथ घिमिरेले योगदान दिनु भएको छ ।' अन्तर्राष्ट्रिय मातृभाषा दिवसले दुरा भाषाको उत्थानमा थप जागरण पैदा गरेको देवबहादुरको कथनले पुष्टि गर्छ ।

अन्तर्राष्ट्रिय मातृभाषा दिवस

बङ्गाली भाषाको अस्तित्वलाई लिएर आन्दोलन चर्कियो । सन् १९५२ फेब्रुअरी २१ का दिन ढाका विश्वविद्यालयका विद्यार्थी तथा राजनीतिक कार्यकर्ताहरू विरोधमा उत्रिए । सरकार प्रशासनले प्रदर्शनकारीहरू माथि गोली चलाउँदा आधा दर्जन विद्यार्थी र प्रदर्शनकारीले सहादत पाए भने सयौं घाइते भए । अन्ततः भाषिक आन्दोलनसँगै सन् १९७१ पाकिस्तानबाट छुट्टिएर बङ्गलादेश स्वतन्त्र राष्ट्र बन्यो । बङ्गलादेशले २१ फेब्रुअरी मातृभाषा दिवस मनाउँदै आयो । युनेस्कोले मानक भाषा र साँस्कृतिक अधिकारको सम्मानमा सन् १९९९ मा २१ फेब्रुअरीलाई अन्तर्राष्ट्रिय मातृभाषा दिवसका रूपमा घोषणा गऱ्यो । त्यसयता फेब्रुअरी २१ अन्तर्राष्ट्रिय मातृभाषा दिवस मनाइदै आएको छ । सन् २०२५ पच्चीसौं अन्तर र्ाष्ट्रिय मातृभाषा दिवस हो । यो पटकको नारा 'दिगो विकासका लागि भाषाहरूको गणना गर' रहेको छ ।

संयुक्त राष्ट्रसंघले सन् २०२२ देखि २०३२ लाई आदिवासी भाषा दशक घोषणा गरेको छ । सदस्य राष्ट्र नेपाल सरकारले त्यसनिम्ति पक्कै पनि यो दशकलाई फलिभूत तुल्याउने छ भन्ने आशा राखिएको छ । हो, युनेस्कोले घोषणा गरेको अन्तर्राष्ट्रिय मातृभाषा दिवस नेपालमा सन् २०१० फेब्रुअरी २१ (विसं. २०६६)देखि औपचारिक रूपमा मनाउन थालिएको हो । नेपाल प्रज्ञा-प्रतिष्ठानले गणतन्त्र नेपालको पहिलो राष्ट्रपति डा. रामवरण यादवको प्रमुख आतिथ्यमा अन्तर्राष्ट्रिय भाषा दिवस महोत्सवको शुभारम्भ गरेपछि निरन्तर रहेको छ । मातृभाषा साहित्य महोत्सव गर्दै आएको छ । पहिलो दिन मातृभाषा गोष्ठी हुने गरेको छ । दोस्रो दिन साँस्कृतिक झाँकी प्रदर्शन, बहुभाषिक कविता गोष्ठी र मातृभाषा साहित्य पुरस्कार प्रदान गर्ने गरिएको छ ।

यसैगरी आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान, भाषा आयोगले समेत कविता गोष्ठी र पुरस्कार प्रदान गर्ने गरेको छ । भाषा आयोगले काठमाडौंस्थित बंगलादेश दूतावास, युनेस्कोलगायतलाई गुहारेर कार्यक्रम गर्ने गरेको पाइन्छ । आदिवासी जनजाति आयोग, मधेसी आयोगलगायत यो दिवसमा कार्यक्रम गर्ने गरेका छन् । संविधानमा उल्लेख भएबमोजिम अरु निकायहरूको समेत चासो बढ्न थालेको पाइन्छ ।

बागमती प्रदेशले तामाङ र नेपालभाषा सरकारी कामकाजको भाषा घोषणा गरी कार्यान्वयन प्रक्रिया अघि बढाएको छ । मधेस प्रदेश आवश्यक प्रक्रिया अघि बढाएर अघि बढेको तर केही सिलसिला नमिले पछाडि हटेको स्थिति छ । गण्डकी प्रदेशले गुरुङ र मगर भाषालाई चाँडै सरकारी कामकाजको भाषा बनाउन ऐन जारी गर्ने अपेक्षा गरिएको छ । बाँकी चारवटा प्रदेशले पनि यसतर्फ ध्यान पुऱ्याउने नै छन् भन्ने आशा छ । तर संघीय सरकारले अहिलेसम्म भाषा ऐन जारी नगर्दा उपयुक्त निकास पाउन सकेको स्थिति छैन ।

स्थानीय सरकारमध्ये काठमाडौं महानगरपालिकाले नेपालभाषालाई विद्यालय तहमा पाठ्यपुस्तक निर्माण गरी शिक्षक दरबन्दीसहित पठनपाठन सुचारु राखेको छ । उपत्यकाका अरु महानगर तथा नगरपालिकाले समेत बाहुल्यताका आधारमा मातृभाषामा पठनपाठनलगायत गतिविधिहरू सुचारु राखेका छन् । यसैगरी देशभरिका ७५३ वटै पालिकाले स्थानीय मातृभाषीहरूको बाहुल्यताका आधारमा विद्यालय तहमा पठनपाठनको व्यवस्था गर्दै जाने हो र यो क्रम सकारात्मक ढंगले अघि बढ्ने हो भने बहुजातीय, बहुभाषिक, बहुसांस्कृतिक, बहुधार्मिक मुलुकको पहिचान जीवन्त रहन्छ भन्ने सकिन्छ । मुलुकका विश्वविद्यालयहरूले त्यसैअनुसारका पहलकदमीहरू अघि बढाउँदै लगेको खण्डमा एक दिन मनाइने अन्तर र्ाष्ट्रिय मातृभाषा दिवसको प्रभाव दीर्घकालीनसम्म रहने निश्चित छ ।

यसैगरी सरकार मातहतका संचार माध्यमहरू गोरखापत्रमा ४५ भाषा, रेडियो नेपालमा २५ भाषा, नेपाल टेलिभिजनमा १४ भाषा र राष्ट्रिय समाचार समितिमा पाँचवटा भाषामा सेवा प्रदान गर्दै आएका छन् । यो सकारात्मक कदम हो । यसका अलावा निजी क्षेत्रबाट खुलेका आमसञ्चारका माध्यमहरूमा समेत मातृभाषाहरूका कार्यक्रम, साहित्य तथा समाचारलाई स्थान दिलाउने पहल हुन जरुरी छ । यति हुँदाहुँदै पनि विज्ञान र प्रविधिको विकास, आर्टिफिसियल इन्टेलिजेन्स (एआई)को जमाना छ । मातृभाषी समुदायका भाषालाई ती प्रविधिसित स्पर्धा गर्ने क्षमता दिलाउने उपायको समेत खोजी हुन र लागू हुन जरुरी छ । इन्डिजियसबाट

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# नेपालभाषाका चलचित्र उत्थानका लागि आयोजित "नेवा: फिल्म नेवा: फुड फेस्टिभल" सम्पन्न

काठमाडौं । नेपालभाषा चलचित्रको प्रवर्द्धन एवं संरक्षण गर्ने हेतुले सिनेमा हलको बक्स अफिसबाट टिकट खरिद गरी नेपालभाषाका चलचित्रहरु हर्ने प्रवृत्तिको विकास एवं विस्तार गर्ने उद्देश्यका साथ नेपालभाषाका चलचित्रहरु पनि नेपाल चलचित्र विकास बोर्डमा दर्ता गरी प्रदर्शनीमा ल्याउनुपर्ने उद्घोषका साथ गत फागुन ११ गते नेवा: फिल्म नेवा: फुड फेस्टिभल आयोजना गरिएको थियो ।

कीर्तिपुर सिनेप्लेक्स हलमा भएको उक्त फेस्टिभल कीर्तिपुर सिनेप्लेक्स, नेपाल कला संस्कृति उत्थान समाज र कीर्तिपुर मिडिया हाउसको संयुक्त आयोजनामा भएको थियो। उद्घाटन कार्यक्रममा बागमती प्रदेशका सांसद एवं पूर्वमन्त्री पुकार महर्जन एवं कीर्तिपुर नगरपालिकाका नगर प्रमुख कृष्णमान डंगोलको प्रमुख आतिथ्यता रहेको कार्यक्रममा कीर्तिपुर नगरपालिका ८ वडाका वडाध्यक्ष सानुमैंया महर्जनको विशेष उपस्थिति रहेको थियो ।

उद्घाटन कार्यक्रममा मन्तव्य राख्ने क्रममा बागमती प्रदेश सांसद एवं पूर्वमन्त्री पुकार महर्जनले नेपालभाषाका चलचित्रहरुको उत्थानका लागि बागमती प्रदेशबाट आर्थिक एवं भौतिक रुपमा सहयोग गर्ने प्रतिवद्धता जाहेर गरेको थियो भने कीर्तिपुर नगरपालिकाका नगर प्रमुख डंगोलले नेपालभाषाका चलचित्र प्रवर्द्धनका लागि नगरपालिकाले योजना बनाई अगाडि लाने विचार राखेको थियो ।

उद्घाटन कार्यक्रममा कीर्तिपुर सिनेप्लेक्सका अध्यक्ष एवं चलचित्रकर्मी नरेन्द्र महर्जन तथा नेपाल कला संस्कृति उत्थान समाजका अध्यक्ष विजयलाल डंगोलले प्रमुख अतिथि एवं अतिथिहरुलाई स्वागत गरेको थियो । नेवा: फिल्म नेवा: फुड फेस्टिभलमा नेवा: परिकारहरुको स्टलका साथ पाँच वटा उत्कृष्ट नेपालभाषाका चलचित्रहरु प्रदर्शन गरिएको थियो । उद्घाटन पश्चात् चलचित्र "गालय् वन", "सेरिब बञ्जा", "लिबाय् धुंका:", "हिसिमति" र "ख्या: वल" प्रदर्शन गरिएको थियो ।

करिब पाँच सय भन्दा बढी दर्शकहरुको उपस्थितिमा उक्त चलचित्रहरु प्रदर्शन गरिएको थियो भने कार्यक्रममा कीर्तिपुर नगरपालिकाका पूर्वमेयर रमेश महर्जन, वडाध्यक्षहरु, पूर्व वडाध्यक्ष हर्ष महर्जन, रमेशमान डंगोल, अरुण डंगोल तथा विभिन्न क्षेत्रका प्रतिष्ठित व्यक्तित्व तथा दर्शकहरुको उपस्थिति रहेका थियो ।

आयोजक संस्था कीर्तिपुर सिनेप्लेक्सका अध्यक्ष महर्जनले नेपालभाषाका चलचित्रहरु निर्माण मात्र गर्ने नभई निर्माण पश्चात् नेपाल सरकारको चलचित्र विकास बोर्डमा दर्ता गरी प्रदर्शनीमा ल्याउनु पर्नेमा जोड दिएको थियो । महर्जनले दर्ता भएका चलचित्रहरु बक्स अफिसबाट टिकट काटी प्रदर्शन गरेको खण्डमा नेपालभाषाका चलचित्रहरु पनि नेपाल सरकारसमक्ष अभिलेखीकरण हुने र मान्यता प्राप्त चलचित्रको रुपमा जहाँ सुकै प्रदर्शन गर्न सकिने जानकारी दिए ।

उनले अबका दिनहरुमा नेपालभाषाका चलचित्रहरुको उत्थानमा आफूले पाईला चाल्ने प्रतिबद्धता जाहेर गर्दै नेपालभाषाका चलचित्रहरु अन्य भाषाका चलचित्रहरु सरह बक्स अफिसबाट टिकटको व्यवस्था गरी कीर्तिपुर सिनेप्लेक्स लगायत उपत्यकाका अन्य हलहरुमा एकैसाथ प्रदर्शनीमा ल्याउने प्रयास गर्ने पनि जानकारी दिए । आयोजकले अबका दिनमा प्रत्येक महिना नेपाल सरकार चलचित्र विकास बोर्डमा दर्ता भएका नेपालभाषाका चलचित्रहरुको महोत्सवको रुपमा प्रदर्शन गरिने जानकारी पनि दिएको छ ।

# "द स्कुल वाल" लाई बेष्ट नेशनल स्टुडेण्ट फिल्म अवार्ड

काठमाडौं । 'द स्कुल वाल' ले '१३ औं नेपाल अफ्रिका इन्टरनेशनल फिल्म फेस्टिभल' मा 'बेष्ट नेशनल स्टुडेण्ट फिल्म अवार्ड' प्राप्त गरेको छ । बालमनोविज्ञानमा आधारित लघुचलचित्र 'द स्कुल वाल' यसअघि छैटौं नेपाल कल्चरल इन्टरनेशनल फिल्म फेस्टिभलमा उत्कृष्ट राष्ट्रिय बाल चलचित्र पुरस्कार, ग्लोबल एक्सिलेन्स अवार्डमा बेष्ट सर्ट फिल्म अवार्ड र रसियाको किनो चलचित्र महोत्सवको फाईनलमा पनि विजेता बनेको थियो । ऐना आर्ट्सको प्रस्तुतिमा निर्माण भएको यस लघुचलचित्रको लेखन तथा निर्देशन मोहन अभिलाषीले गरेका हुन् । लघुचलचित्रलाई सुरेन्द्र क्षेत्रीले कास्टिङ डिरेक्सनसँगै निर्माणसमेत गरेका हुन् ।

कलेज अफ जर्नालिजम एन्ड मास कम्युनिकेसन र विलक्षण क्रियसन प्रा.लि.को आयोजना एवम् चलचित्र विकास बोर्डको सह आयोजनामा भएको यो चलचित्र यो महोत्सवमा नेपाल सहित १७ देशका ४९ वटा चलचित्र सहभागी थिए । संस्कृति पर्यटन तथा नागरिक उड्डयान मन्त्री बद्री प्रसाद पाण्डेको प्रमुख आतिथ्य एवम् श्रीलँकाको लागि नेपाली राजदूत डा. पूर्ण नेपाली, राष्ट्रिय सभाका सदस्यद्वय जगप्रसाद शर्मा, सिता बौडेल, अन्तर र्‍ाष्ट्रिय पत्रकार महासंघका अध्यक्ष रामप्रसाद खनाल, नेपाल चलचित्र कलाकार संघका अध्यक्ष मोहन निरौला, निवर्तमान अध्यक्ष कृष्ण मल्ल, रवीन्द्र खड्का, जिटिजेडका प्रोग्राम म्यानेजर डा. बर्नड अल्पट तथा विभिन्न चलचित्रकर्मीको विशेष आतिथ्यमा सम्पन्न महोत्सवको समापन समारोहमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय र अफ्रिकन समूहका चलचित्रहरूलाई ३१ विधामा अवार्ड प्रदान गरिएको थियो । महोत्सव अध्यक्ष डा. मञ्जु मिश्रको सभापतित्वमा महोत्सव समापन समारोह सम्पन्न भएको थियो । 'द स्कुल वाल' नाइजेरियाको इडो स्टेट इन्टरनेशनल फिल्म फेस्टिभल, इरानको रोशड इन्टरनेशनल एजुकेशन एण्ड साईन्टिफिक फिल्म फेस्टिभल, जिम्वावेको भर्सिटी फिल्म एक्स्पो, इटालीको वर्क एण्ड इन्टरप्राइजेज फिल्म फेस्टिभल अवार्ड, इजिप्टको पोर्ट सेड फिल्म फेस्टिभल, ब्राजिलको फेस्टिभल द सिनेमा स्टुडेन्टि द ग्युबा, अमेरिकाको स्मलरिग्स अवार्ड र बेलायतको लिफ्ट अफ फिल्ममेकर सेसन्स र फस्ट टाईम फिल्म मेकर सेसन्समा छनोट भएको थियो । नेपालको इन्टरनेशनल माउण्टेन फिल्म फेस्टिभल, थाहा चलचित्र महोत्सव, नेपाल इन्टरनेशनल फिल्म फेस्टिभलमा समेत छनोट भएको छ । 'द स्कुल वाल' मा पर्खालको रुपमा गरिबी, परिस्थिति र जिम्मेवारीलाई प्रस्तुत गरिएको छ । लघुचलचित्रमा विद्यालय नजिकै जुत्ता पालिस गर्ने तराईको एक बालकको संघर्षको कथालाई प्रस्तुत गरिएको छ । काठमाडौंमा छायांकन गरिएको लघुचलचित्रको दृश्य नारायण जिसीले खिचेका हुन् । लघुचलचित्रको सम्पादन तथा रङ्ग संयोजन अनिल कुमार महर्जन र सहायक निर्देशन करन साउदको रहेको छ । लघुचलचित्रमा श्लोक साहले मुख्य भुमिका निर्वाह गरेका छन् । अन्य चर्चित कलाकारहरु सुवास प्रसाद गजुरेल, सरोज लामिछाने, चन्द्र प्रसाद पाण्डे, गीता श्री थापा, आयुषा गौतम, बिदुर प्रसाद सिग्देल, निष्ठा दाहाल, रेहान केसी, खेम राज कोईराला, उद्धव दंगाल लगायतका कलाकारहरुको अभिनय रहेको छ। थुप्रै लघुचलचित्र तथा नाटकहरु निर्माण गरिसकेका निर्माता सुरेन्द्र क्षेत्री पछिल्लो समय नयाँ चलचित्र निर्माणको तयारीमा रहेका छन् । अन्य थुप्रै कामहरु ग्रियो, अब नयाँ चलचित्रको चाँडै घोषणा हुने र नयाँ वर्षबाटै फ्लोरमा जाने उनी बताउँछन् ।

केहि समयअघि रसियन हाउसमा आयोजित १६ औं राष्ट्रिय बालनाटक महोत्सव तथा बाल लघुचलचित्र प्रदर्शनीमा 'द स्कुल वाल' को विशेष प्रदर्शन गरिएको थियो । विभिन्न विद्यालयहरुमा समेत प्रदर्शन भईरहेको 'द स्कुल वाल' को बजार व्यवस्थापक रुपमा लर्निङ मिडिया एण्ड इभेण्ट प्रा.लि.ले गरिरहेको छ । यस फिल्मलाई विद्यालयहरुमा प्रदर्शन गर्दा विद्यालय, शिक्षक तथा विद्यार्थीहरुले सकरात्मक प्रतिक्रिया दिएको र धेरै विद्यालयहरुबाट प्रदर्शनको लागि माग भएको बजार व्यवस्थापक कपिलराज लामिछाने बताउँछन् ।

# स्रष्टा अमर बान्तुका पाँच गीतका भिडियो सार्वजनिक

काठमाडौं । मिलाप मासिकको आयोजनामा स्रष्टा अमर बान्तुका एक साथ पाँच गीतका भिडियो सार्वजनिक गरिएको छ। शनिबार काठमाडौंको कमलपोखरीस्थित सिटी सेन्टरमा एक भव्य समारोहबीच गीतकार, संगीतकार, गायक एवं कवि बान्तुका पाँच गीतको भिडियो सार्वजनिक गरिएको हो । समारोहमा 'हरपल हरक्षण', 'माया हल्का हल्का', ' मनको फूलबारी', 'सम्बन्ध' र तिम्रै प्रवाह' गीतका भिडियो सार्वजनिक गरिएको थियो । सबै गीतका भिडियोलाई शान थापाले निर्देशन गर्नुभएको हो ।

'हरपल हरक्षण'मा शब्द एवं संगीत अमर बान्तुको रहेको छ भने स्वर मनोज थापा र सुनिता थेगिमको छ । यस्तै 'हल्का हल्कमा' पनि शब्द एवं संगीत अमर बान्तुको छ भने सत्यराज आचार्य र सहिमा श्रेष्ठले स्वर दिनुभएको थियो । त्यस्तै ' मनको फूलबारीमा पनि शब्द एवं संगीत अमर बान्तुको छ भने स्वर सारिका घिमिरे र बिसी राईको छ । यस्तै, 'सम्बन्ध'मा एसी कोइराला शब्द, संगीत अमर बान्तुको छ भने स्वर प्रताप दासको छ । त्यस्तै 'तिम्रै प्रवाह'मा अमर बान्तुको गायन, शब्द र संगीत रहेको छ । यो गीतको भिडियोमा बान्तुलाई भावना राईले अभियनमा साथ दिनुभएको छ । सबै गीतका भिडियोलाई दिनेश पराजुलीले छायांकन गर्नुभएको हो ।

मिलापका सम्पादक कृष्ण भुसालको सभापतित्वमा सम्पन्न सो समारोहमा पूर्वमन्त्री एवं गीतकार एसपी कोइरालाले स्वागत मन्तव्य राख्नुभएको थियो । भीम विराग प्रतिष्ठानका अध्यक्ष केशवलाल श्रेष्ठले गीतसंगीत साहित्यले मानिसलाई जोडने बताउँदै कवि बान्तुका बारेमा लेख्नुभएको कविता वाचन गर्नुभएको थियो ।

त्यस्तै गीतकार संघका अध्यक्ष वसन्त वित्यासी थापाले बान्तुले गीतकारको अक्षय कोष स्थापना गरेर ठूलो कार्य गरेको सम्झना गर्दै उहाँको व्यक्तित्वको चर्चा गर्नुभएको थियो । निर्देशक एवं नायिका दीपाश्री निरौलाले बान्तुको एउटा गीतमा आफूले पनि अभिनय गरेको सम्झना गर्दै उहाँ सर्वप्रिय व्यक्तित्व भएको चर्चा गर्नुभयो । 'मैले एउटा उहाँको गीतमा अभिनय पनि गरेकी छु, अमर बान्तु सबैका प्रिय व्यक्तित्व हुनुहुन्छ । गीतकार एवं कविका रूपमा चिनिनुभएका बान्तु संगीतकारका रूपमा रहेको र अभिनय पनि उक्तिकै सशक्त छ', निर्देशक निरौलाले भन्नुभयो ।

अन्तर्राष्ट्रिय नेपाली साहित्य समाज (अनेसास)का पूर्वअध्यक्ष एवं साहित्यिक पत्रकार संघका अध्यक्ष राधेश्याम लेकालीले बान्तुको लेखनमात्र नभएर कविता वाचनकला पनि सशक्त रहेको जिकिर गर्नुभयो ।

वरिष्ठ गीतकार गीतकार राजेन्द्र थापाले धेरै पत्रै पत्रमा बान्तुको खुबी रहेको बताउँदै उहाँलाई 'सयपत्री' नाम दिन्छु भन्नुभयो । गीतकार संघमा उहाँको सहयोगको चर्चा गर्दै वरिष्ठ गीतकार थापाले बान्तुले समाजका विविध क्षेत्रका पाटालाई साहित्यमार्फत प्रस्तुत गरेको धारणा राख्नुभयो ।

हालै मिलापकी कार्यकारी सम्पादक गीत अधिकारीको 'मेरा कलमका डोबहरू पाठकमाझ ल्याएको जानकारी गराउँदै उहाँले चाडै गीतकार जनक रावलको गीतिसंग्रह पाठकमाझ ल्याउने तयारीमा रहेको बताउनुभयो ।

गीतकार एवं कुशल प्रस्तोता नरेश भट्टराईले सहजीकरण गर्नुभएको सो समारोहमा स्रष्टा बान्तुलाई मिलाप आवरण सम्मान अर्पण गरिएको थियो । एक हजारभन्दा बढी गीत रचना गर्नुभएका बान्तुका १५० भन्दा बढी गीत रेकर्ड छन् । उहाँका केही गीत करोडौं क्लबमा पनि छन् ।

# चलचित्रबाट विदेशी डलर भित्र्याउनुपर्छ – नवीन श्रेष्ठ

काठमाडौं । चलचित्र 'लाज शरणम्'का निर्माता नवीन श्रेष्ठले आफूले चलचित्र निर्माणका लागि कुनै सम्झौता नगरेको बताएका छन् । बजेट, लोकेसन र समयमा आफूले कुनै पनि सम्झौता नगरेको बताएका छन् । रियलस्टेट र होटेल व्यवसायमा रहेका नवीनको चलचित्रमा यो पहिलो लगानी हो । यसअघि उनले कला, साहित्य र सिनेमामा लगानी गरेका थिएनन् । 'लाज शरणम्'को टिम र मेहनत देखेर मैले यो क्षेत्रमा लगानी गरेको हुँ । अब यो क्षेत्रमा प्रवेश गरेपछि म पछि हट्दिनँ, चलचित्रमा लगानी गरिरहने हो," नवीन भन्छन् ।

रियलस्टेटको व्यापार केही सुस्तायको बेला चलचित्रमा आए पनि यसलाई निरन्तरता दिने उनको भनाइ छ । आफू चलचित्र क्षेत्रमा आउनुको अर्को पनि कारण रहेको नवीन बताउँछन् । "विदेशबाट पैसा ल्याउने माध्यम चलचित्र पनि एक हो । विदेशी चलचित्रले जसरी नेपालबाट पैसा लैजान्छन्, त्यसैगरी विदेशबाट हामीले पनि पैसा ल्याउनुपर्छ," निर्माता नवीन भन्छन्, "हामीले पनि अब चलचित्रबाट विदेशी डलर भित्र्याउनुपर्छ । यसका लागि हामीले राम्रो चलचित्र बनाउनुपर्छ । यसतर्फ हामीले आ-आफ्नो ठाउँबाट सोच्नुपर्छ ।"

नेपाली चलचित्रलाई डलर भित्र्याउने माध्यमका रूपमा कलाकार, निर्माता र सरकार सबै मिलेर अगाडि बढाउनुपर्नेमा उनको जोड छ ।

चलचित्र 'लाज शरणम्' महाशिवरात्रिको अवसर पारेर फागुन १४ गतेदेखि प्रदर्शनमा आउँदै छ ।

लोकप्रिय हास्य टेलिश्रृंखला 'सक्किगोनि'को टिमले निर्माण गरेको चलचित्र 'लाज शरणम्'मा मुख्य भूमिकामा सिताराम कट्टेल (धुर्मुस) छन् । चलचित्रलाई कुमार कट्टेलले निर्देशन गरेका छन् । विजय बराल, अर्जुन घिमिरे, सागर लम्साल, हरिष निरौला, प्रियाना आचार्य, महेश त्रिपाठी, अर्पण थापा, रेणु योगी, विजय लामा, मुकुन्द श्रेष्ठ, माला लिम्बूलगायत कलाकारको अभिनय रहेको छ ।

जेपिटी क्रियसनको ब्यानरमा बनेको सिनेमाका निर्माता नवीन श्रेष्ठ हुन् भने राम नरेश शाह र सिर्जना खड्का सह-निर्माताका रूपमा रहेका छन् ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

**THIMI TIMES WEEKLY**




वर्ष १८ अङ्क २७ ने.सं. ११४५ चिल्लाथ्व षष्ठी फागुन २१ गते बुधबार, २०८१ 05 March 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## राजनीतिक दलसम्बन्धी विधेयक प्रयोगको रणनीतिमा सत्तारुढ दल

काठमाडौं । बर्तमान सरकारसँग दुईतिहाइ नजिकको मत छ । यही बहुमतको आधारमा र विगतमा पनि संसदको अधिवेशन छलेर सरकार चलाउने प्रयास गरेका बर्तमान नेकपा एमालेका अध्यक्ष केपि शर्मा ओलीले आफु प्रधानमन्त्री भएको बर्तमान समयमा पनि सोही पुराने प्रवृति दोहोऱ्याउने प्रयासमा छन् । तर विपक्षी र सरकारमा रहेकै दलहरुको विरोध पछि संसद अधिवेशन बोलाउन बाध्य बर्तमान सरकारले गत पुस र माघमा जारी अध्यादेश पारित गराउन नसके पछि एक सातायता संघीय संसद्अन्तर्गत प्रतिनिधि सभा बैठक रोकेको छ ।

विधयेक अधिवेशनको रुपमा रहेको बर्तमान प्रतिनिधिसभालाई सत्तारुढ दलहरुको स्वार्थ अनुरुप चलाउन तल्लो सदन रोकेर बसेको सरकारका लागि अहिले भूमिसम्बन्धीसहित ६ वटा अध्यादेशको तनाव छ । सत्तारुढ सात दलीय गठबन्धनमासमेत अध्यादेशमा सहमति नजुटेपछि नेपाली कांग्रेस र नेकपा एमालेले निष्क्रिय अवस्थामा रहेको राजनीतिक दलसम्बन्धी विधेयक अघि बढाएर साना दललाई गलाउने रणनीति बनाएका छन् । १३ फागुनबाट रोकिएको बैठक फागुन २१ गते बुधबार सुरु हुँदै छ । उक्त बैठकमा सरकारले राजनीतिक दलसम्बन्धी विधेयक पनि अघि बढाउने तयारीमा रहेको सुत्रको भनाई छ ।

सरकारले हिउँदे अधिवेशन सुरु हुनुअघि ल्याएका ६ वटा अध्यादेश अहिलेसम्म सदनमा पेस गर्न सकेको छैन । यस्तोमा अध्यादेश पास गराउन राजनीतिक दलसम्बन्धी विधेयक अगाडि बढाएर दल विभाजनसम्मको तयारीमा सरकार पुगेको आँकलन हुन थालेको छ । अहिले राजनीतिक दलसम्बन्धी विधेयक अगाडि बढाउन कांग्रेस र एमालेमा सहमति जुटिसकेको बताइएको छ । यसका प्रावधानबारे दुई दलमा छलफल भइरहेको कांग्रेस प्रमुख सचेतक श्याम घिमिरे बताउँछन् । यो सहमतिले दलसम्बन्धी ऐन २०७३ को दफा ३३ लाई संशोधन गर्न विधेयक अघि बढाउने तयारी भइरहेको उनले बताए ।

'लामो समयदेखि राजनीतिक दलसम्बन्धी विधेयक निष्क्रिय छ । कुनै प्रयोजनका लागि भन्दा निष्क्रिय कानुन सक्रिय बनाउन यो विधेयक ल्याउन लागेका हौँ', घिमिरेले भने, 'यसलाई सक्रिय बनाएर सरकारले विभिन्न प्रयोजनका काम गर्न सक्छ ।'

सरकारले राजनीतिक दलसम्बन्धी विधेयक ल्याएर ६ वटा अध्यादेश पास गर्ने रणनीति लिएको प्रतिपक्षका नेताहरूको बुझाइ छ । पार्टी फुटाउन सहज हुने गरी राजनीतिक दलसम्बन्धी ऐन २०७३ लाई संशोधन गर्ने विधेयक संसद्मा लैजाने सुनेपछि प्रतिपक्षी दलहरू सशंकित छन् । तर, अहिलेसम्म औपचारिक आवाज आएको छैन । सरकारले निर्णय नगरिसकेकाले उनीहरू नबोलेका हुन् । राजनीतिक दलसम्बन्धी ऐन ०७८ सालदेखि निष्क्रिय छ । नेकपा विभाजनपछि अदालतको परमाशेदमा २०७८ असार २८ गते प्रधानमन्त्री बनेका कांग्रेस सभापति शेरबहादुर देउवाले एमाले फुटाउन २०७८ भदौ २ मा राजनीतिक दलसम्बन्धी अध्यादेश ल्याएका थिए ।

त्यसबेला अध्यादेशमार्फत् संसदीय दल वा केन्द्रीय समितिमध्ये एकमा २० प्रतिशत संख्याको सुविधा दिएर एमाले फुटाएका माधवकुमार नेपाल र झलनाथ खनालले नेकपा एकीकृत समाजवादी जन्माएका थिए । एमाले विभाजनपछि राष्ट्रपति विद्यादेवी भण्डारीले २०७८ असोज ११ मा उक्त अध्यादेश खारेज गरेकी थिइन । त्यसपछि त्यो कानुनका कयौँ दफा निष्क्रिय छन् । राजनीतिक दलसम्बन्धी ऐन २०७३ को दफा ३३ को उपदफा २ मा केन्द्रीय समिति र संघीय संसद्को संसदीय दलका कम्तीमा ४० प्रतिशत सदस्यले चाहेमा छुट्टै राजनीतिक दल बनाउन पाउने कानुनी व्यवस्था छ । त्यसैलाई सक्रिय बनाउन सरकारले पहल गरिरहेको कांग्रेस-एमालेको दाबी छ । तर, उपेन्द्र यादव नेतृत्वको जनता समाजवादी पार्टीले ६ वटामध्ये जारी भूमिसम्बन्धी अध्यादेशमा असहमति जनाएको छ । जसपा नेपालले भूमिसम्बन्धी अध्यादेश फिर्ता नगरे अरु पनि पास गर्न नदिने अडान लिएको छ ।

प्रमुख प्रतिपाक्षी नेकपा माओवादी केन्द्रका प्रमुख सचेतक हितराज पाण्डे संसद्मा विधेयक पेस गरे त्यसको प्रभाव र महत्त्व हेरेर उचित कदम चाल्ने बताउँछन् । उनी दल विभाजनका लागि विधेयक ल्याउन लागेको भए प्रतिपक्षीसहित सत्तारुढ दललेसमेत विरोध गर्ने दाबी गर्छन् । सरकार गलत बाटोमा जानु ठिक हुँदैन । यदि त्यो अवस्था आए चुप बस्दैनौँ ।'

गत शनिबार जसपा नेपालकी सांसद रेखा यादवले भूमिसम्बन्धी अध्यादेशको पक्षमा मतदान गर्न सरकारले सांसदहरूलाई १० करोडसम्मको अफर गरेको दाबी गरेकी थिइन । त्यसपछि उनी मौन छिन् । अहिले जसपा र लोसपासँग सरकार वार्तामा नभएको नेताहरू बताउँछन् । अहिले जसपा केन्द्रीय समिति बैठक बसिरहेको छ ।

बाँकी पेज ७ मा

## नेपाल मजदुर किसान पार्टीको अध्यक्षमा पुनः विजुक्छें (रोहित) सर्वसम्मत



भक्तपुर । नेपाल मजदुर किसान पार्टीको अध्यक्षमा पुनः नारायणमान विजुक्छें (रोहित) सर्वसम्मत निर्वाचित भएका छन् । पार्टीको आठौ महाधिवेशनबाट आठौ पटक उनी पुनः सर्वसम्मत अध्यक्षमा चुनिएका हुन् । फागुन १६ देखि चलेको महाधिवेशन मंगलबार भक्तपुरमा सम्पन्न भएको थियो ।

विजुक्छें ८५ वर्षका भए । २०३१ माघ १० मा उनकै नेतृत्वमा स्थापना भएको पार्टीको आठौं महाधिवेशनसम्म उनी नै निरन्तर अध्यक्षमा सर्वसम्मत निर्वाचित हुँदै आएका हुन् । पार्टीको केन्द्रिय सचिवमा प्रेम सुवाल र कोषाध्यक्ष मोहनप्रसाद प्रजापति सर्वसम्मत निर्वाचित भए ।

३३ सदस्यीय

बाँकी पेज ७ मा

## भक्तपुर–नगरकोट सडक नगरपालिकाले स्तरोन्नति गर्ने



भक्तपुर - भक्तपुरको प्रमुख पर्यटकीय गन्तव्यको रुपमा रहेको नगरकोट पुग्ने मुख्य सडक अब चाँगुनारायण नगरपालिका आफैँले स्तरोन्नति गर्ने भएको छ । आउँदो वैशाखदेखि चाँगुनारायण नगरपालिकाले आयोजना गर्न लागेको नगरकोट भ्रमण वर्ष, २०८२ लाई लक्षित गर्दै नगरपालिकाले भक्तपुर-नगरकोट सडक आफैले स्तरोन्नति गर्ने गरी बोलपत्र आह्वान गरेको छ ।

एक्जिम बैंक इण्डियाको ऋण सहयोगमा नेपाल सरकारसँग २०७३ असार ३ गतेसम्म सम्पन्न गर्ने गरी २०७१ जेठ २२ गते शैलुङ कन्स्ट्रक्सन र भारतीय कम्पनी अराभली इन्फ्रापावर लिमिटेडले संयुक्त निर्माण सम्झौता भएको थियो । रु २७ करोडमा ठेक्का सम्झौता

बाँकी पेज ७ मा

## विद्यार्थीका सिर्जनामा स्वयम्भूका सभ्यता, संस्कृति र सम्पदा



काठमाडौं । काठमाडौँ महानगरपालिका- १५ का ३३ विद्यालयका ६० विद्यार्थीहरू स्वयम्भूमा चित्र कोर्न भेला भए । उनीहरूलाई स्वयम्भू महोत्सव आयोजक समितिले 'विश्व सम्पदा सूचीमा सूचिकृत स्वयम्भू क्षेत्र' शीर्षकमा प्रतियोगितात्मक चित्रकलामा सहभागी गराएको थियो । विद्यार्थीहरूले स्वयम्भूसहित उपत्यकाका दृश्य चित्रमा उतारे । चित्रमा उनीहरुले आफ्ना भावनासमेत पोखे । स्कुले विद्यार्थीहरूले आँखाले देखिरहेको दृश्य दुरुस्त चित्रमा कोरेको देखेर आगन्तुहरुलेसमेत चाख दिएर हेरे ।

बोधिसत्व स्कुल स्वयम्भूका विद्यार्थी सूर्यमान तामाङले स्वयम्भूको चित्र कोरे । कला सिर्जनामा रुचि राख्ने तामाङले स्वयम्भूमा आएर कला सिर्जना गर्न पाउँदा खुसी महसुस भएको बताए । कामना इन्टरनेशनल स्कुलकी आरोही प्रसाईं पनि चित्र बनाउने प्रतियोगितामा भाग लिन पाउँदा खुसी भइन् । उनले स्वयम्भूसहित धरहरालाई एउटै क्यान्भासमा उतारिन् ।

आफ्नो चित्रकलामा धरहरा जोडेर उपत्यकाको मौलिकता देखाउन खोजेको उनले बताइन् । उपत्यकाका सम्पदा जोगाउन कलाको भूमिका महत्त्वपूर्ण हुने उनको बुझाइ छ । स्वयम्भू महोत्सवमा आयोजित उक्त चित्रकला प्रतियोगितालाई स्वर्णिम स्कुलका भगवान् श्रेष्ठ र काठमाडौँ महानगरपालिका वडा नं १५ ले सहयोग गरेको हो । चित्रकला प्रतियोगितामा कक्षा ३ देखि ५ र कक्षा ६ देखि ८ गरी दुई समूहमा राखेर कला सिर्जना गराइएको थियो ।

प्रतियोगिताको संयोजन गरेका कलाकार दिवेश प्रधानले स्वयम्भू क्षेत्रभित्रका सभ्यता, संस्कृति र चाडपर्वलाई समावेश गर्ने गरी विषय दिएको र त्यही विषयमा विद्यार्थीले चित्र कोरेका बताए । स्वयम्भू महोत्सव मूल आयोजक समितिका संयोजक तथा महानगरको वडा नं १५ का अध्यक्ष ईश्वरमान डङ्गोलले कला संस्कृतिको जगेर्नाका लागि विद्यालयस्तरीय प्रतियोगितात्मक कला सिर्जना कार्यक्रम गरिएको बताए ।

प्रतियोगितामा कक्षा ६ देखि ८ का विद्यार्थीको समूहतर्फ मोर्डन नेपाल स्कुलकी ग्रिन्ता पण्डित प्रथम, यूरो स्कुलकी अश्रेया शाक्य द्वितीय र डल्लु आवासीय स्कुलका स्वनिग श्रेष्ठ तृतीय भए । मैत्री स्कुल र

बाँकी पेज ७ मा

## गायक कुमा सागर र भाषिक मानवअधिकार

● गणेश राई

भाषा विचार विनिमयको साधन मात्रै नभई, संस्कृतिको वाहक, ज्ञान तथा सभ्यताको खानी पनि हो' भन्नेतर्फ सबैको ध्यानाकर्षण भएकै हुनुपर्छ ।



तर, हाम्रो नेपाली समाजमा त्यो चेतनालाई भद्दा मजाकका रूपमा लिने गरिएको छ । भरखरै 'फेब्रुअरी २१ : अन्तर्राष्ट्रिय मातृभाषा दिवस' मनाइरहँदा देश नेपालमा बोलिने मातृभाषा र सामाजिक मूल्यमान्यताका शब्दमाथि भए, गरिएका ती भद्दा मजाकमाथि भाषावैज्ञानिक डा. तारामणि राईले समाजको ध्यानाकर्षण गराएका छन् ।

पछिल्लो घटना क्रम यस्तो छः

घटना-१ नेवारी टोनमाथि मजाक

'गायक कुमा सागरलाई गिज्याएको आरोपमा ३ कमेडियनविरुद्ध प्रहरीमा निवेदन'

नेपाल भाषाको लवजमा गीत गाएर गायक कुमा सागरलाई गिज्याएको आरोपमा ३ जना कमेडियन विरुद्ध प्रहरीमा निवेदन दर्ता गरिएको छ । नेवार समुदायका व्यक्तिहरूले कमेडियन सजन श्रेष्ठ, सुशान्त प्रधान र उत्सव सापकोटा विरुद्ध निवेदन दिएका हुन्

गायक कुमा सागरलाई गिज्याउनेमाथि कारबाही नगरेको भन्दै सम्पदा संरक्षण महाअभियानले बिहीबार जिल्ला प्रहरी परिसर काठमाडौँ अगाडि प्रदर्शन गरेको छ । नेपाल भाषाको लवजमा गीत गाएर गायक कुमा सागरलाई गिज्याएको आरोपमा ४ जनाविरुद्ध प्रहरीमा निवेदन दर्ता गरिएको छ । उनीहरूले कमेडियन सजन श्रेष्ठ, सुजन जिम्बा र उत्सव सापकोटासहित पोडकास्ट चलाउने सुशान्त प्रधानविरुद्ध निवेदन दिएका हुन् । कुमा सागरलाई गिज्याएर सम्पूर्ण

बाँकी पेज ७ मा

# "मातृभाषामा विद्यालय शिक्षा"ले भाषा संरक्षणमा पार्ने प्रभाव अस्पष्ट

पछिल्लो जनगणनामा नेपालभर १२४ भाषा बोलिने पाइए पनि त्यसमा पुस्तान्तरणको अभाव हुँदा तिनको भविष्य सङ्कटमा पर्ने जोखिम रहेको भाषा आयोगका अध्यक्षले बताएका छन् । आधारभूत विद्यालय शिक्षामा मातृभाषालाई समेट्नुको अर्थ उनीहरूको सिकाइ प्रभावकारी गराउनुसँगै त्यस्ता भाषाको संरक्षण गर्ने काम गर्ने भए पनि अझै मातृभाषा अध्ययनको महत्त्वबारे स्पष्टता नभइरहेको आयोगका अध्यक्ष गोपाल ठाकुर बताउँछन् ।

"हाम्रो मानसिकतामा एक भाषिकताले ठूलो ठाउँ बनाएको छ । अब त मुख्य भाषा नेपालीलाई नै पनि अङ्ग्रेजीले विस्थापित गरिरहेको देख्न थालिएको छ," ठाकुर भन्छन् । "त्यसैले मातृभाषाको माध्यममा कहीँ पनि पढाइ सुरु भएको छैन । मातृभाषाको विषय पनि धेरै ठाउँमा एकदुई वर्ष सुरु हुने तर निरन्तरता नपाउने अवस्था छ ।"

मातृभाषाको आकर्षण घट्नुको कारणबारे विवाद

नेपालमा परम्परागत विद्यालयका रूपमा गुम्बा, गुरुकुल र मदरसामा मातृभाषामा पढाउन सकिने संस्थागत प्रावधान विगतदेखि नै रहेको शिक्षा मन्त्रालयका प्रवक्ता बताउँछन् । "गुरुकुलमा संस्कृत, गुम्बामा गोम्पा र मदरसामा उर्दू भाषा पढाइ हुने गरेको छ । व्यावहारिक रूपमा आवश्यकता महसुस हुँदा तिनको माथिल्लो तहसम्मै पढाइ भइरहेको अवस्था छ," शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयका प्रवक्ता शिवकुमार सापकोटा भन्छन् ।

तर भाषा आयोगका अध्यक्ष नेपालका हकमा तिनलाई मातृभाषा मान्नेनमान्नेमै प्रश्नहरू रहेको बताउँछन् । "उर्दू हाम्रो हकमा मातृभाषा नहुन पनि सक्ने सम्भावना छ, गुम्बामा पढाइ हुने तिब्बती भाषा नेपालका भोटबर्मेली समुदायका भाषाको माउ भाषा हुन सक्ने भए पनि त्यसले ती सबैलाई समेट्ने कुरा आंशिक रूपमा मात्र सत्य हो । संस्कृतले सबैलाई समेट्छ भन्ने कुरा पनि आंशिक रूपमा मात्र सत्य हो ।"

राष्ट्रिय शिक्षा नीति २०७६ ले आधारभूत तहसम्मको शिक्षा आवश्यकताअनुसार मातृभाषामा दिन सकिने व्यवस्था गरेपछि स्थानीय सरकारहरूले त्यससम्बन्धी निर्णय गरेर कार्यान्वयनमा लैजान सक्ने व्यवस्था छ । त्यसबाहेक प्राथमिक तहसम्म मातृभाषामा पढाउन सकिनेबारे समेत कानुनी प्रावधान बनेसँगै कैयौँ मातृभाषामा पाठ्यक्रम तयार पारेर प्रयोगमा ल्याइएको अवस्था छ । त्यसै गरी मातृभाषालाई स्थानीय विषयका रूपमा पढाउन सकिने व्यवस्था समेत छ ।

शिक्षा तथा मानव स्रोत विकास केन्द्र र यूनिसेफ मिलेर गरेको 'नेपालमा बालबालिकाको सिकाइ उपलब्धिमा भाषाहरू र भाषिक नीतिहरूको प्रभावको बुझाइ' नामक अध्ययनले विद्यालय शिक्षाको प्रभावकारिताका लागि बहुभाषिक शिक्षणमा जोड दिएको छ ।

शिक्षा मन्त्रालयका प्रवक्ता सापकोटा थप्छन्, "सबै कक्षा, विषय र पाठ अध्यापनका बेला हुने विभिन्न मातृभाषाका विद्यार्थीअनुरूप बहुभाषिक अध्यापन गराउने शिक्षक तयार पार्ने सरकारी नीति छ ।" तर बहुभाषिक क्षमतायुक्त शिक्षकहरू तयार पार्ने काम चुनौतीपूर्ण भएको बताइन्छ ।

भाषा आयोगका अध्यक्ष चाहिँ नेपालमा बहुभाषिक अध्यापनबारे बुझाइको कमी रहेको बताउँछन् । "बहुभाषिक कक्षाको शिक्षकले धेरैवटा भाषा जान्नैपर्छ भन्न खोजिएको होइन । विकल्पका रूपमा कुनै कुराको तस्बिर देखाएपछि विभिन्न मातृभाषाका विद्यार्थीहरू आफैले त्यसमा देखाइएका कुरालाई आफ्नो भाषामा भन्न थाल्छन् । त्यस्तो तरिकामार्फत् बरु शिक्षकले सिक्ने गर्छन्," भाषा आयोग अध्यक्ष ठाकुर भन्छन् ।

"तर एउटा कक्षामा अर्को भाषा बोल्न नहुनेजस्तो परिपाटी बनेपछि विद्यार्थीहरूको सिकाइ यता न उताको भइरहेको छ ।" नेपालमा बोलिने सबै भाषा राष्ट्रिय भाषाहरू हुने र हरेक समुदायलाई आफ्नो लिपि संरक्षण गर्ने अधिकार हुने संवैधानिक व्यवस्था छ । "नेपालमा लिपि भएका भाषाको विषय वा पाठ्यक्रम बनाएर पठनपाठन गर्न र त्यसमा दस्तावेजीकरण गर्न सहज हुन्छ । भाषिकाका हकमा लिपि नहुँदा बहुभाषिक स्वरूपमा मात्र सम्बोधन गरिन्छ," शिक्षा मन्त्रालयका प्रवक्ता शिवकुमार सापकोटा भन्छन् ।

उनी काठमाण्डौं र ललितपुर महानगरमा नेपाल भाषा पढाउने अभियान सुरु हुँदा शिक्षक अभाव नभएको अवस्था देखिनु यसतर्फको बाटोका लागि सुखद पक्ष भए तापनि उनीहरूलाई तालिमको आवश्यकता पर्ने बताउँछन् ।

नेपालमा १२४ वटा भाषा बोलिने भए पनि २१ वटा भाषा मात्र १ लाख भन्दा धेरैले बोल्ने 'मुख्य भाषा'का रूपमा छन् । देशका करिब ९५ प्रतिशत जनसङ्ख्याले २१ वटा मातृभाषा बोल्छन् भने सबैभन्दा धेरै अर्थात् करिब ४५ प्रतिशत मानिसहरू नेपाली भाषा बोल्छन् । शिक्षा प्रवक्ता सापकोटा भन्छन्, "बत्तीस वटा जति भाषाका पाठ्यक्रम बनेका देखिन्छन् । हामी बढीभन्दा बढी भाषामा पाठ्यक्रम बनाउन लागिपरेका छौं ।"

आधारभूत तहमा मातृभाषाबाट अध्यापन गर्न सक्दा त्यो प्रभावकारी र दिगो अध्यापन हुन्छ भन्ने भए तापनि माथिल्लो तहमा मातृभाषाको माग महसुस नगरिएको सापकोटा बताउँछन् । विसं २०७६ सालमा ल्याइएको राष्ट्रिय पाठ्यक्रम प्रारूपमा आधारभूत तहमा शिक्षण माध्यमको भाषा मातृभाषा वा नेपाली हुने प्रावधान राखिएको छ । नागरिक शिक्षाजस्ता राष्ट्रिय पहिचानसँग सम्बन्धित विषय बाहेक अन्यमा अङ्ग्रेजीलाई शिक्षण माध्यमका रूपमा प्रयोग गर्न सकिने बताइएको छ ।

शिक्षा आयोगले प्रस्तावित विद्यालय शिक्षा विधेयक २०८० मा शिक्षणको माध्यम भाषाका रूपमा नेपाली, मातृभाषा, संस्कृत र अंग्रेजी हुन सक्ने सिफारिस गरेको छ । बीबीसी न्यूज नेपाली

# भ्रमको खेतिमा सरकारलाई पीएचडी : बालेन

काठमाडौ । भ्रमको खेतिमा पीएचडी पाउन मिल्ने हो भने अहिलेको सरकारलाई दिए हुन्छ भन्दै काठमाडौका मेयर बालेन्द्र शाह (बालेन)ले फेरिपनि सरकारप्रति आक्रोश पोखेका छन् ।

विभिन्न छ वटा विषयमा सरकारले महानगर माथि भ्रम सिर्जना गराएको र महानगरलाई काम गर्ने वातावरण बन्न नदिएको मेयर बालेनले आरोप लगाएका छन् ।

सोमबार अपराह्न सामाजिक सञ्चालमार्फत उनले ६ स्पष्टीकरण दिएका छन् भने सरकारका प्रधानमन्त्री केपी शर्मा ओली र उनको दल नेकपा एमालेमाथि दर्जनौं प्रश्न खडा गरेका छन् ।

उनको ६ स्पष्टीकरण र सवाल जस्ताको तस्तै :

१. भ्यू टावरको नक्सा पासको स्वीकृति मेयरले दिएको भन्ने प्रचारित भ्रम

कहिले देखी नक्सापास मेयरले गर्न थाले ? सामान्य कानुनको ज्ञान राख्नेले पनि भन्न सक्छ कि यसको अधिकार मेयरसँग हुँदैन । कानुनले यही भन्छ । अनि यो एगदष्अि एचष्खबतभ एबचतलभचकजष्ड ले नक्सापास गर्ने अधिकार कार्यपालिकालाई दिइएको छ । अनि नक्सापास गर्न बसेको व्यक्ति स्वयंले नक्सापास गरिसकेपछि पनि बारम्बार दुई महिनासम्म पीपीपीमा कसरी नक्सापासको काम गराउने भन्ने विषयमा बैठक बसेको प्रमाण हामीसँग सुरक्षित छ ।

२. कार्यकारी टिक्दैन भनेर फैलाउन खोजिएको भ्रम

अहिलेसम्मको हाम्रो कार्यकालमा ४ जना कार्यकारी हटेका छन् । ४ मध्ये २ लाई हटाउनुको कारण उनीहरू भ्रष्टाचारमा संलग्न रहेको भनेर हो । के कार्यकारी टिक्छन् भन्ने देखाउन हामीले भ्रष्टहरूलाई संरक्षण गरिराख्नु पर्ने हो ? २ जनालाई सरकारले हटाएको हो, त्यो पनि महानगरलाई जानकारीसमेत नदिएर ।

हामीले भ्रष्टाचारमा जोडिएकाले हटाएका हौं । सरकारले के कारण हटायो ? हामीले २ जना भ्रष्टहरूलाई हटाउँदा कार्यकारी टिक्न दिएन भन्ने सरकारले उत्तिनै संख्यामा तर असल काम गरेर बसेकालाई हटाउँदा काठमाण्डौंमा असल कार्यकारी टिक्न सरकारले नै दिदैन भन्ने अर्थ लाग्दैन र ? यदि ति २ जना मध्ये कुनै एक कार्यकारी नहटाएको भए यो कुरा नै आउदैन थियो त ।

३. काठमाण्डौंमा कार्यकारी जना मान्दैनन् भन्ने लज्जास्पद, लाचार र गैरजिम्मेवार भनाई

सरकारले आफु मातहतका एकजना कर्मचारीलाई आवश्यकता अनुसार काममा लगाउन सक्ने रैनछ भन्ने त यहाँबाट नै पुष्टि भयो । अहिले कर्मचारी जान मान्दैनन् भन्दै राजधानीको महानगरमा कर्मचारी पठाउन नसक्ने सरकारले भोलि दंगाग्रस्त क्षेत्रमा सिडिओ जान मानेनन् भनेर पठाउन नसक्ला, अपराध रोक्न पुलिस जान सकेन भनेर पठाउन नसक्ला । एउटा घातक उदाहरण त नवलपरासी पश्चिमको सामूहिक झडपले पनि देखाएको छ ।

आफ्नो कर्मचारीमा नियन्त्रण नभएको, कर्मचारीको विश्वासमा यतिसम्म गिरेको सरकारले समृद्धि ल्याइदिन्छ भनेर हामीले पत्याइदिनु पर्ने ?

४. ऐनले पालिकालाई नै निमित्त तोकेर काम गर्ने अधिकार दिएको छ भन्ने फैलाइएको भ्रम

स्थानीय सरकार सञ्चालन ऐन, २०७४ को दफा ८४ को ४ ले कार्यकारी नियुक्ती नभए सम्मको लागि नेपाल सरकारले निजामती सेवाको कुनै अधिकृत कर्मचारीलाई प्रमुख प्रशासकीय अधिकृतकारूपमा खटाउन सक्छ भनिएको छ । सरकारले यहिसमेत गरेको छैन, बरू उल्टै मेयरले चाह्यो भने राख्न सक्छ भन्ने भ्रम फैलाइदैछ ।

सोही ऐनले दिएको अधिकार प्रयोग गरेर नेपाल सरकारले प्रमुख प्रशासकीय तोकिदिनु पर्नेमा सो नगरि प्रतिवेदन आए पछि भनेर आफ्नो गैरजिम्मेवारीलाई लुकाइरहेको छ ।

५. कार्यकारीको छानविनको रिपोर्ट लुकाइयो भन्ने भ्रम

लुकाउनलाई त हुनु पर्यो नि, होइन । रिपोर्ट बनेकै छैन, लुकाइयो भन्ने भ्रम फैलाइन्छ ।

६. मन्त्रीसँग समन्वयन गर्नुपर्‍यो

मन्त्रीसँग समन्वयन गर्नु भनेको के हो ? पत्र लेख्ने, आधिकारिक संयन्त्रबाट सम्पर्क गर्ने, त्यहि होइन ? विधि र वैधानिकतालाई समन्वयनसमेतको मान्यता नदिएर के व्यक्तिगत अन्तरंगमात्र खोजेको हो सरकारले ? हामीले मन्त्रीलाई पटक पटक पत्र लेखेको, आधिकारिक संयन्त्रबाट सम्पर्क गरेका छौं । थप समन्वयन नखोजौं, विधि र जिम्मेवारी खोजौं ।

प्रधानमन्त्री केपी ओलीज्यू, हामी तपाईका दुश्मन होइनौं, विकासका साझेदार हौं । हामीले गरे जति विकासका सबै काम पनि तपाईकै कार्यकालमा भएका हुन् भनिदिउँला । तर त्यसो भन्दा पत्याउने बनाउन आग्रह, पुर्वाग्रहबाट मुक्त भएर विकासमा साझेदारी गरि त्यो दाबी गर्न सक्ने ल्याकत बनाउने जिम्मा तपाईकै हो । अनि जति भ्रम फैलाए पनि, हामी तपाईको भ्रष्ट कार्यकर्तासँग झुक्दैनौं । महानगरलाई जतिसुकै नाकाबन्दी लगाउनुहोस्, नियतमा फरक पर्दैन । अहिलेका लागि देशमा आवश्यक सबै भन्दा ठुलो कुरा सुशासन हो । भ्रष्टहरूविरूद्धको लडाइँ हो ।

सुशासनका लागि जोसँग जुध्नु परे तयार छु, तर सम्झौता गर्दिन । सुशासन कायम गरेरै छोड्छु ।



# विनायकमा परम्परागत भेषभुषा प्रतियोगिता




भक्तपुर । हाम्रो संस्कृति : हाम्रो गौरव ,हाम्रो पहिचान नेपालीको शान भन्ने मूल मन्त्रलाई आत्मसात गर्दै कलिला मन र मस्तिष्कमा आफ्नो परम्परागत भेषभूषाबारे हरेक वर्ष जानकारी दिँदै आएको विनायक शिक्षा निकेतनले यही २०८१ फागुन १७ गते परम्परागत भेषभुषा तथा प्रतिभा प्रदर्शन कार्यक्रमको आयोजना गरिरेको छ ।

विद्यार्थीहरुलाई कलिलो उमेरदेखि नै आफ्नो भाषा संस्कृति परम्परा बारे प्रयोगात्मक हिसाबले ज्ञान दिने उद्देश्यले आयोजित उक्त कार्यक्रम विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिको अध्यक्षतामा सम्पन्न भएको थियो । पूर्व प्रा वि तहका शिक्षिकाहरूको संयोजनमा तथा पूर्व प्रा वि तहकी एकेडेमिक कोर्डिनेटर पदमकेसरी श्रेष्ठद्वारा सहजीकरण गरिएको उक्त कार्यक्रममा कक्षा नर्सरी र केजीका विद्यार्थीहरू मात्र सहभागी रहेको थियो ।

कार्यक्रम काठमाडौं विश्वविद्यालयकी शिक्षाविद तथा शोधकर्ता नारायणी ठकुरीको प्रमुख अतिथ्यतामा सम्पन्न भएको थियो । विनायकको पूर्व प्रा वि तहमा अध्ययनरत विद्यार्थीहरुका शतप्रतिशत अभिभावकहरूको उपस्थिति रहेको उक्त कार्यक्रममा अतिथिहरू मध्यपुर थिमि नगरपालिका वडा नम्बर ६ का वडा सदस्य अरुणा कारन्जित, अभिभावक सुसन प्रजापति, शिक्षाविद मदन रिजाल तथा किरण थापा श्रेष्ठ, नेपाल अस्ट्रेलिया फ्रेन्डसिप एसोसिएसनका सदस्य अस्ट्रेलियन नागरिक रश, चाइनिज भोलेन्टियर र विद्यालयका सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाले विद्यालयको छत्तीसौं वार्षिकोत्सव तथा कार्यक्रम सफलताको शुभकामना व्यक्त गर्दै विद्यालयले हरेक वर्ष गर्दै आएको उदाहरणीय एवं मननयोग्य कार्यको प्रशंसा गरेको थियो ।

कार्यक्रममा बोल्दै विद्यालयका संस्थापक प्रिन्सिपल प्रजापतिले वास्तविक, प्रयोगात्मक र एक्काइसौं शताब्दीको प्रगतिशील सोचको रुपान्तरित शिक्षा विद्यालयले प्रदान गरिरहेको र विद्यार्थीको सर्वाङ्गीण विकास गर्न पढाइका साथसाथै खेलकुद र अन्य अतिरिक्त एवं विषयगत क्रियाकलापमा विद्यालयले जोड दिँदै अब्बल, सक्षम र दक्ष नागरिक उत्पादनमा पहल गरिरहेको जानकारी दिए । कार्यक्रममा उत्कृष्ट प्रतिभा प्रदर्शन गर्ने विद्यार्थीहरुलाई प्रमुख अतिथि तथा अन्य अतिथिहरुले ट्रफी तथा प्रमाणपत्र प्रदान गरिएको थियो भने विद्यार्थीहरूले मनमोहक किसिमले विभिन्न गीत, संगीत, नृत्य तथा कराते र जिम्न्यास्टिकका विभिन्न इभेन्टहरु समेत प्रस्तुत गरेका थिए ।

# चाँगुनारायणका महिलाहरुलाई हातले कपडा बुन्ने तालिम दिईने




भक्तपुर । चाँगुनारायण नगरपालिकाका स्थानीय महिलाहरुलाई हातले कपडा बुन्ने तालिम प्रदान गरिने कार्यक्रमको शुभारम्भ भएको छ । महिला विकास केन्द्रको आयोजनामा चाँगुनारायणका करिब पचास महिलाहरुलाइ तालिम दिन लागिएको जनाइएको छ ।

बागमती प्रदेश सरकार सामाजिक विकास मन्त्रालयको आ.व. २०८१/०८२ को स्वीकृत कार्यक्रम अन्तर्गत महिलाहरुको सीप विकासको लागि हाते होजियारी तालिम दिन लागिएको हो ।

उद्घाटन कार्यक्रमलाइ सम्बोधन गर्दै नेकपा (माओवादी केन्द्र) का केन्द्रीय सदस्य डि.पि ढकालले महिलाहरु आर्थिक अभावकै कारणले घरेलु हिंसाको शिकार हुने गरेको बताउँदै नेता ढकालले तालिम महिलाहरुको सीप विकास मात्र नभई आर्थिक समृद्धिमा समेत मद्दत गर्ने विचार व्यक्त गरे

बागमती प्रदेश सभा सदस्य भुवनकेशरी श्रेष्ठको प्रमुख आतिथ्यतामा सम्पन्न कार्यक्रममा पूर्व संविधानसभा सदस्य उमा कपाली, नेकपा (माओवादी केन्द्र) चाँगुनारायण नगर समिति सचिव चण्डिका लामिछाने, अनेमसंघ (क्रान्तिकारी) भक्तपुर अध्यक्ष राजेश्वरी सिल्पकार, वाइसियल नेपाल भक्तपुर अध्यक्ष सरराज उप्रेतीलगायत महिलाहरुको उपस्थिति रहेको नेकपा (माओवादी केन्द्र) चाँगुनारायण नगर समिति अध्यक्ष नरेश खड्काले जानकारी दिए ।

तालिम भोलि फागुन १७ गते शनिबार देखी सुरु भई करिब एक महिनासम्म दिईने अनेमसंघ (क्रान्तिकारी) चाँगुनारायण अध्यक्ष चण्डिका पाण्डेले बताईन् ।

# 'सिम्पल सम्मान-२०८१" द्वारा विविध क्षेत्रका विशिष्ट व्यक्तित्वहरु सम्मानित



-जयराम बिडारी

काठमाण्डौं । कला साहित्य तथा समाजसेवाका क्षेत्रमा उत्साहित युवाहरुको सक्रियतामा २७ वर्ष अघि स्थापना गरिएको सिम्पल आर्टसको आयोजनामा 'सिम्पल सम्मान-२०८१' बाट विशिष्ट व्यक्तित्वहरु सम्मनित भएका छन् । संस्थाका अध्यक्ष पुस्कर जंगमको अध्यक्षता तथा प्रमुख आतिथ्यमा सिनामंगल स्थित टेष्ट अफ काठमाण्डौको सभाहलमा कार्यक्रम सम्पन्न गरिएको थियो । उक्त २७ औं वार्षिकोत्सवका अवसरमा नेपाली साहित्य, कला संस्कृति, गीत संगीत तथा समाजसेवामा विशिष्ट योगदान दिएका विशिष्ट व्यक्तित्वहरुलाई सिम्पल सम्मानद्धारा सम्मानित गरिएको थियो । सो अवसरमा बरिष्ठ कलाकार मदनदास श्रेष्ठ, बरिष्ठ गायिका लोचन भट्टराई, पत्रकार एवं साहित्यकार छविरमण सिलवाल, शिक्षासेवी शारदा ढुंगेल, समाजसेवी एवं प्रिन्सिपल ज्ञानेन्द्र भट्टराई र नव कलाकार अञ्जली महर्जनलाई प्रोत्साहित(सम्मानित) गरिएको थियो ।

नेपाली साहित्य, संस्कृति, संगीत, कला तथा समाजसेवामा २७ वर्षदेखि निरन्तर क्रियाशिल संस्था सिम्पल आर्टसले गरेको उक्त कार्यक्रममा सबै उपस्थित व्यक्तिहरुलाई प्रमुख अतिथिको रुपमा रहेका सहभागीहरुबाट सम्मान गरिएको थियो । सो समारोहमा उपन्यास समाज नेपालका अध्यक्ष शंकर भारतीले स्वागत मन्तव्यका क्रममा संस्थाहरु जन्मिनु भन्दा पनि ती संस्थाहरुले समाज उपयोगी कर्ममा कत्तिको निरन्तर योगदान दिन्छन् त्यो चाहीं महत्वपूर्ण कुरा रहेको बताउँदै सिम्पल आर्ट्सले विगत २७ वर्षदेखी समाजमा दिएको योगदानको प्रशंसा गरेका थिए । सो अवसरमा सिम्पल आर्टसका संस्थापक मध्यका एक केशव सान्दाईले संस्थागत गतिविधि अन्तर्गत स्वास्थ्य सेवा,साहित्यिक गतिविधि, पुस्तक प्रकाशन,टेलिचलचित्र, तथा सामाजिक संदेश मूलक चलचित्र अटिजम निर्माणका बारेमा उल्लेख गर्दै सम्मानित व्यक्तित्वहरुका बारेमा प्रकाशन पारेका थिए ।

उक्त कार्यक्रममा राष्ट्रिय सुसेली फाउण्डेनका अध्यक्ष दुर्गा अधिकारी 'भमरकोटे' ले सम्मानित व्यक्तित्वहरुमा समर्पित सुसेली प्रस्तुत गरी माहौलमा रौनकता थपिएको थियो । भने सम्मानित व्यक्तित्वहरुका तर्फबाट शिक्षासेवी शारदा ढुंगेलले मन्तव्य राख्दै जीवनको सम्पूर्ण जीवन शिक्षा क्षेत्रमा बिताउँदा कुनै दिन सम्मानित भइएला भन्ने नसोचिकन निरन्तर कर्म गर्ने क्रममा जीवनको उत्तरार्धमा आफ्ना पूर्व विद्यार्थीहरुको संस्था मार्फत सम्मानित हुन पाएकोमा अत्यन्त पुलकित रहेको बताइन् । यसैगरि साहित्यिक पत्रकार संघका निवर्तमान अध्यक्ष एवं साहित्यकार राधेश्याम लेकालीले सिम्पल आर्ट्सका कार्यक्रममा सक्रियताका साथ सहभागिता जनाउँदै आइरहेको बताउँदै सम्मानित व्यक्तित्वहरुलाई वधाई ज्ञापन गर्दै सम्मानित व्यक्तित्वहरुका आगामी दिन अझै थप सर्जनात्मक रुपमा अघि बढोस् भनि शुभकामना दिएका थिए । उक्त कार्यक्रमको सहजीकरण बिमल कोइरालाले गरेका थिए ।

# बोदेमा धर्मचक्र गुम्बाको शिलान्यास



भक्तपुर । मध्यपुर थिमिको बोदे क्षेत्रमा रहेको धर्मचक्र गुम्वा निर्माण गर्न जग पूजा गरी नगर प्रमुख सुरेन्द्र श्रेष्ठले शिलान्यास गरेका छन् । गुम्बा ब्यवस्थापन समितिका अध्यक्ष गणेशमान चक्रधरले करिब ७० लाखको लागतमा निर्माण कार्य सम्पन्न हुने जानकारी गराए । त्यसका लागि स्थानीय सुकुदेव साहुखलको अध्यक्षतामा उपभोक्ता समिति गठन भएको र सो समितिले दुई वर्ष भित्रका गुम्बा निर्माण कार्य सम्पन्न गरिने लक्ष्य रहेको उनले बताए ।

शिलान्यास समारोहमा नगर उपप्रमुख बिजय कृष्ण श्रेष्ठ, वडा नं ९ का वडा अध्यक्ष सानुकाजी राजवाहक, बौद्ध गुरुहरु र भक्तजनहरुको समेत उपस्थिति रहेको थियो ।

# मध्यपुर कानुन व्यवसायी समाजको प्रारम्भिक साधारणसभा सम्पन्न




भक्तपुर । मध्यपुर थिमि क्षेत्रमा स्थायी बसोबास रहेका कानुन व्यवसायीहरुको साझा संस्था मध्यपुर कानून व्यवसायी समाजको पहिलो प्रारम्भिक साधारण सभा गत शुक्रबार शंखधरस्थिा प्यासिफिक फुड ल्याण्डमा एक कार्यक्रमबीच सम्पन्न भएको छ । कार्यक्रमको बागमति प्रदेश सभाका सभासद् तथा पूर्व प्देश मन्त्री माननीय डा. राजेन्द्र मान श्रेष्ठले पानसमा दीप प्रज्ज्वलन गरी कार्यक्रमको उद्घाटन गरेको थियो ।

कार्यक्रम समाजका अध्यक्ष बरिष्ठ अधिवक्ता दुर्गामोहन श्रेष्ठको सभपतित्वमा भएको थियो । कार्यक्रममा समाजका सल्लाहकार तथा पूर्व न्यायाधीस लक्ष्मीकृष्ण श्रेष्ठ, अधिबक्ता महेश श्रेष्ठलगायत कानुनबिद्हरुको उपस्थित रहेको थियो । कार्यक्रममा यस अघि दुर्गामोहन श्रेष्ठको अध्यक्षतामा गठित समाजमा उपाध्यक्ष राजेन्द्र श्रेष्ठ, सचिव राम सुन्दर श्रेष्ठ, सह सचिव सुनिल श्रेष्ठ, कोषाध्यक्ष सानू लक्ष्मी गःसि र सदस्यहरूमा विरेन्द्र भक्त प्रधानाङ्ग, सरोज कुमार तु छे, बाबु कृष्ण श्रेष्ठ, सावित्री श्रेष्ठ, शिवसुन्दर श्रेष्ठ, सुमन श्रेष्ठ, फर्समाया देवी मगर र रिया श्रेष्ठ रहेको कार्यसमितिलाई सर्वसम्मतले पारित गरेको थियो ।

# चन्द्रमाको सतहमा ब्लू घोस्ट



काठमाडौँ । फायरफ्लाइ एयरोस्पेसको चन्द्र अभियान ब्लू घोस्ट सफलतापूर्वक चन्द्रमाको सतहमा अवतरण गरेको छ ।

अवतरण चन्द्रमाको मारे क्रिसियम क्षेत्रमा भएको थियो । यो मिसन चन्द्रमाको यो अदृश्य भागमा अवतरण गर्ने तीन प्रमुख अन्तरिक्ष अभियानहरूको सुरुवात हो । ब्लू घोस्ट मिसन जनवरी १५, २०२५ मा स्पेसएक्सको रकेट फाल्कन ९ मार्फत अन्तरिक्षमा प्रक्षेपण गरिएको थियो ।

यो अन्तरिक्ष मिसनले लगभग एक महिनासम्म पृथ्वीको परिक्रमा गरेपछि चन्द्रमामा अवतरण गरेको थियो । १६ दिनसम्म चन्द्रमाको कक्षमा बसेपछि, यो मार्च २ मा सफलतापूर्वक चन्द्रमाको सतहमा अवतरण गरेको थियो । फायरफ्लाइ एयरोस्पेस कम्पनीले एक विज्ञप्ति जारी गर्दै ब्लू घोस्ट चन्द्रमामा सफलतापूर्वक अवतरण गरेको जनाएको छ ।

यससँगै, फायरफ्लाइ एयरोस्पेस चन्द्रमामा अन्तरिक्ष यान अवतरण गर्ने पहिलो निजी कम्पनी बनेको छ । यो चन्द्रमाको अन्वेषणको दिशामा ठूलो कदम साबित हुनेछ । फायरफ्लाइ एयरोस्पेसले नासाको सहयोगमा यो अभियान सम्पन्न गरेको थियो ।

नासाले आफ्नो कमर्सियल लुनार पेलोड सर्भिसेज कार्यक्रमको एक हिस्सा, ब्लू घोस्ट मिसनसँग १० वटा पेलोड पठाउँदैछ । यस मिसनको उद्देश्य चन्द्रमाको वायुमण्डलको बारेमा महत्त्वपूर्ण जानकारी सङ्कलन गर्नु हो । ब्लू घोस्टले चन्द्रमाको भित्री भागमा तापको प्रवाहको अध्ययन गर्नेछ, जसले वैज्ञानिकहरूलाई चन्द्रमामा तापको उत्पत्ति निर्धारण गर्न मद्दत गर्नेछ ।

ब्लू घोस्ट मिसन लगभग १४ दिनसम्म चल्छ, जुन चन्द्रमामा एक दिन बिताउनु बराबर हो । फायरफ्लाइ एयरोस्पेसको यो सफल मिसनले चन्द्रमामा मानव पहुँच बढाउने प्रयासलाई बढावा दिनेछ ।

# ट्रम्पको कर नीतिले विश्व बजारमा हलचल, प्रतिवादमा चीन र क्यानडा

काठमाडौं । अमेरिकाले उच्च कर लगाएपछि क्यानडा, मेक्सिको र चीनले कडा प्रतिक्रिया दिएका छन् । अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पको आदेशानुसार क्यानडा, मेक्सिको र चीनविरुद्ध उच्च कर नीति लागू भएको हो । यी देशबाट आयात हुने सामानमा उच्च कर लगाउने घोषणा ट्रम्पले यसअघि नै गरेका थिए । तर, कही समय स्थगित गरिएको निर्णय अब लागू भएको हो ।

ट्यारिफ युद्धले विश्व अर्थतन्त्रमा असर पार्ने संकेत देखिएको छ भने वित्तीय बजार पनि अस्थिर भएका छन् । क्यानडाले ट्रम्प प्रशासनको कडा आलोचना गर्दै १५० अर्ब डलर बराबरका अमेरिकी सामानमा २५ प्रतिशत करु लगाउने घोषणा गरेको छ । ओटावाले यो कदमलाई अमेरिका विरुद्धको 'न्यायोचित प्रत्युत्तर'को रूपमा चित्रण गरेको छ । क्यानडाको यो कदमले अमेरिकी कृषि, स्टिल तथा आल्मुनियम उद्योगलाई असर गर्ने अनुमान गरिएको छ ।

क्यानडाका प्रधानमन्त्री जस्टिन ट्रुडोले अमेरिकी कदमलाई अन्यायपूर्ण र अनावश्यक व्यापार नीतिको उदाहरण भन्दै यसको प्रभाव अमेरिकी उपभोक्तामा पनि पर्ने बताएका छन् । ट्रुडोले क्यानडाली उद्योगलाई सुरक्षा प्रदान गर्न सरकार पूर्ण रूपमा प्रतिबद्ध रहेको उल्लेख गरेका छन् ।

चीनले पनि अमेरिकाबाट आयात हुने विभिन्न कृषि उत्पादनहरूमा १० देखि १५ प्रतिशतसम्मको कर लगाउने घोषणा गरेको छ । यो निर्णयले अमेरिकी किसानलाई प्रत्यक्ष रूपमा असर गर्नेछ, जसले पहिल्यै चीनलाई प्रमुख निर्यात बजारको रूपमा लिएर उत्पादन गर्दै आएका छन् । साथै, चीनले अमेरिकाका विभिन्न कम्पनीमाथि पनि कडा कदम चाल्न सक्ने संकेत गरेको छ । चिनियाँ सरकारका प्रवक्ताले अमेरिकी व्यवसायलाई लक्षित गर्दै थप नियमनको दायरा बढाउने चेतावनी दिएका छन् । यसले अमेरिकी टेक्नोलोजी र अटोमोबाइल उद्योगमा ठूलो असर पार्ने विश्लेषकहरूले बताएका छन् । व्यापार तनावको बीचमा राष्ट्रपति ट्रम्पले चीनमाथि लगाइएको ट्यारिफ दर दोब्बर गर्दै थप २० प्रतिशत पुर्‍याएका छन् ।

उनले चीनमाथि अमेरिकी भूमिमा गैरकानुनी लागूऔषध, विशेषगरी फेन्टानाइलको तस्करी रोक्न नसकेको आरोप लगाएका छन् । 'चीनले फेन्टानाइल रोक्न केही पनि गरेको छैन । हाम्रा नागरिकहरू लागूऔषधका कारण मरिरहेका छन् । अब हामी थप कदम चाल्नेछौं,' ट्रम्पले सामाजिक सञ्जाल ट्रुथमार्फत बताए ।

ट्रम्प प्रशासनले ट्यारिफ निर्णयलाई क्यानडा र मेक्सिकोबाट हुने गैरकानुनी आप्रवासन रोक्न आवश्यक उपायको रूपमा प्रस्तुत गरेको छ । ट्रम्पले क्यानडा र मेक्सिकोले अमेरिका प्रवेश गर्ने आप्रवासीहरूको संख्या घटाउन अझ बढी काम गर्नुपर्ने बताएका छन् । व्यापार युद्धले विश्वभरका वित्तीय बजारमा अस्थिरता निम्त्याएको छ । अमेरिकी शेयर बजारमा गिरावट देखिएको छ भने एसियाली बजार पनि अस्थिर बनेका छन् । विशेषज्ञहरूले अमेरिकी उपभोक्ताले व्यापार युद्धको असर महसुस गर्ने बताएका छन् । अमेरिकी बजारमा दैनिक उपभोग्य सामानहरू महँगो हुने सम्भावना रहेको र आयातमा निर्भर रहेका उद्योगमा उत्पादन लागत बढ्ने अनुमान गरिएको छ । 'यदि यो व्यापार युद्ध चर्कियो भने अमेरिकी उपभोक्ताहरूले इलेक्ट्रोनिक्स, अटोमोबाइल, खाद्यान्न र लुगा-जुत्तासम्मको मूल्य वृद्धिको सामना गर्नुपर्नेछ,' एक अर्थशास्त्रीको भनाइ उदृत गर्दै बीबीसीले उल्लेख गरेको छ ।

ट्रम्प प्रशासनले अपनाएको व्यापार नीति अमेरिकाको परम्परागत खुला बजार अवधारणासँग बाझिने देखिएको छ । 'अमेरिका फर्स्ट' नीतिअन्तर्गत ट्रम्पले अमेरिका केन्द्रित व्यापार सम्झौताको मात्र वकालत गरिरहेका छन् ।'

विश्लेषकहरूले यस्तो नीति दीर्घकालीन रूपमा अमेरिकाकै उद्योगका लागि हानिकारक हुन सक्ने चेतावनी दिएका छन् ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ।

- प्रेमचन्द

## सम्पादकीय

### सरकारको प्राथमिकता अध्यादेश पारित

देशमा पहिलो दलको रुपमा रहेको नेपाली कांग्रेसको साझेदारीमा दोस्रो ठूलो दल नेकपा एमालेका अध्यक्ष केपि ओलीको नेतृत्वमा दुई तिहाइको बहुात रहेको सरकार छ। तर पनि सत्तारुढ दलले अध्यादेश मार्फत सत्ता संचालनको प्रयास गरेको छ। उसले बिधेयक अधिवेशनको रुपमा चिनिने हिउँदे अधिवेशनलाई छलेर केही समय अगाडि अध्यादेश राष्ट्रपति मार्फत जारी गर्न लगाएको थियो। जसको प्रतिपक्ष, आम नागरिक र सत्ता गठवन्धनबाटै चर्को रुपमा आलोचना हुन थाले पनि बाध्य भएर सरकारले हिउँदे अधिवेशन आह्वान गरेको थियो।

अहिले सोही अध्यादेश संसद मार्फत पारित गराउने रणनीतिमा सरकार लागेको छ। हुन त हिउँदे अधिवेशन विधेयक अधिवेशन हो। जसवाट राज्य सञ्चालनका लागि आवश्यक र संविधान कार्यान्वयनका लागि आवश्यक विधयेकहरु पारित गर्दै लागू गर्नु पर्ने दायित्व संसदको हो। तर सरकार अध्यादेशमा संसदलाई अड्काएर बसेको छ। संसद शुरु भएको केही समय पछि नै संसदको बैठक अवरुढ बनेको छ। जसको कारण पनि संसदको लागि गर्नु पर्ने आवश्यक कार्य गर्न सकिरहेको अवस्था छैन। विगतमा जस्तै बर्तमान हिउँदे अधिवेशन पनि विना कुनै उपलब्धि सकिने त होइन भन्ने आंशका उब्जिएको छ। यसमा सत्तापक्षकै सासदहरुबाट चिन्ता जनाइएको छ।

अहिलेका राजनीतिक दलका नेताहरूको बोली दलका कार्यकर्ताहरुले पत्याएको देखिए पनि आमजनताले खासै पत्याउँदैनन्। संसद्को अधिवेशन बोलाउनुपर्ने बेला भइसक्दा पनि नबोलाई अध्यादेश जारी गराउने सरकारको कदमको उतिबेलै व्यापक रुपमा आलोचना भएको हो। अन्ततः संसद् अधिवेशन आह्वान भयो तर सरकारले भने अध्यादेशहरू संसद्मा निर्णयार्थ प्रस्तुत गर्ने आँट गर्न सकेको देखिएको छैन। संसद्को माथिल्लो सदन राष्ट्रिय सभामा सत्तारूढ दलहरूको स्पष्ट बहुमत नहुनाले सरकारले अध्यादेश प्रस्तुत गर्ने आँट नगरेको हुनुपर्छ।

सरकारले अध्यादेश जारी नगराउँदैमा बहुमत पुग्ने नपुग्ने विचार गर्नुपर्थ्यो। त्यसमा पनि संविधानले तत्काल नगरी नहुने कामका लागि मात्र अध्यादेश जारी गराउने सुविधा सरकारलाई दिएको हो। यसबीच जारी कुनै पनि अध्यादेश तत्काल जारी नगरी नहुने प्रकृतिका थिएनन्। अध्यादेश जारी गर्दा सरकार बहुमतको गणितमा मात्र सरकार चुकेको भए त्यसलाई सामान्य रणनीतिक कमजोरी मान्न सकिन्छ। त्यसलाई सच्याउन सरकारले विपक्षसँग गम्भीर विमर्श गर्नुपर्थ्यो। तर, सरकार अहिलेसम्म त्यो बाटामा लागेको देखिएन। उल्टै सत्ता पक्ष विपक्षीलाई पेलेरै जाने रणनीतिमा देखिएको छ। किनकी विधयेक अधिवेशनको रुपमा रहेको संसदीय कार्यलाई सरकार जसरी हुन्छ। मन्त्रीपरिषद्को सिफारिसमा राष्ट्रपतिबाट जारी गर्न लगाइएको अध्यादेश पारित गराउन नेकपा एमाले र नेपाली कांग्रेस लागेको छ। हिजो त्यही नेपाली कांग्रेस नेकपा एमालेका नेतृत्वमा बनेको सरकारले अध्यादेश मार्फत सरकार संचालन गर्दा चर्को रुपमा विरोधमा उत्रिएको थियो। आज सत्ता साझेदार हुँदा एमालेकै साथमा रहनु नेपाली कांग्रेसको राजनीतिक बेइमानी हो। यो भनेको सत्ताको लागि जे पनि गर्ने राजनीतिक दललृ आम जनता र राज्यका लागि केही गर्दैन भन्ने बलियो आधार पनि हो। तसर्थ बर्तमानमा आमजनता नेता प्रति विश्वस्त छैनन्। भलै तिनका कार्यकर्ताहरु चने नेताप्रति भक्तिभाव राख्दै विश्वास गरेको अवस्था छ।

संसदीय प्रणालीमा उपल्लो सदनमा बहुमत नभए पनि सरकारको वैधानिकतामा प्रश्न उठ्दैन। यसैले बहुमत नपुगेर अध्यादेश पारित नभए पनि सरकार संविधानतः सङ्कटमा पर्दैन। तर, अध्यादेशको नियत र त्यसलाई पारित गराउन प्रपञ्च गर्न खोजिएको हो भने त्यसले सरकारमाथि नैतिक प्रश्न खडा हुन्छ।

त्यस्तै जसपाका अध्यक्ष यादवले भूमिसम्बन्धी अध्यादेश पारित गर्न भूमाफियाले सरकारलाई दबाब दिएको आरोप लगाएका छन्। प्रधानमन्त्री ओलीको नाम पटकपटक भूमाफियाको संरक्षकका रूपमा लिने गरिएको छ। यसैले यादवको आरोप सत्य त होइन भन्ने सन्देह जनमानसमा उत्पन्न भएको हो।

यसैले सरकारले ल्याएको अध्यादेश पारित होस् वा नहोस्। तर संसदीय प्रणालीमा संसदको हिउँदे अधिवेशनलाई विधयेक अधिवेशनको रुपमा अघि बढाउन सत्तापक्ष, प्रमुख प्रतिपक्ष र प्रतिपक्ष सबैको दायित्व हो। यसमा सबैले आ-आफ्नो दायित्व निभाउनु आवश्यक छ। तबमात्र आम नागरिकले दलका नेताहरु प्रति विश्वास गर्नेछ। तसर्थ आम जनमानसमा विश्वासको बातावरण सिर्जना गर्नु बर्तमान समयको माग हो।

# नेता दलाल, सरकारी कर्मचारीले मात्रै पाउँछन् सेवासुविधा !

● *अनुसा थापा*

मुलुकको निजामती क्षेत्रप्रति जनताको विश्वास गुम्दै छ किन ? सरकारी कर्मचारीले कार्यालय खुलेको दिन सेवाग्राहीलाई सेवा दिनैपर्छ। जनताले तिरेको करबाट तलब खाएका उनीहरुले समयमै कार्यालय पुगेर आफ्नो काम थाल्नुपर्छ। तर, सरकारी कर्मचारीहरुलाई आफ्नो दायित्व र जिम्मेवारीको अलिकति पनि ख्याल छैन्।

जनता सेवा लिनका लागि बिहानदेखि लाइन बसेका हुन्छन्, उनीहरुचाँहि घरजग्गा देखाउन दौडिरहेका हुन्छन्। सेयर बेच्नका लागि ब्रोकरको कार्यालय धाएको भेटिन्छन्। कार्यालय बिदा भएको दिन त यी काम गर्नु ठिकै होला तर कार्यालय छोडिछोडि 'दलाल' को काम गर्दै हिंड्नेमाथि कारबाही हुनुपर्छ कि पर्दैन् ?

जनताले तिरेको करबाट महिनावारी तलब खाने, लुगा लगाउने, गाडी चढ्ने सरकारी कर्मचारी कामचाँहि व्यक्तिगत स्वार्थको गर्छन्। मीटरब्याजमा पैसा लगानी गर्ने पनि अधिकांश सरकारी कर्मचारी नै छन्। कार्यालयमै भएपनि कर्मचारीहरु काम गर्दैनन्। टेलिफोनमार्फत घण्टौं आफन्तसँग कुराकानी गरेर बस्छन्।

यता सेवाग्राहीको लाइन लागेको हुन्छ उता उनीहरु गफ हाँकेर बसेका हुन्छन्। घाम तापेर दिन कटाउँछन्। बिहान १० बजे कार्यालय पुग्नुपर्ने भएपनि आधा दिन कटिसकेपछि मात्र जान्छन्। हाजिर गरेर घर दौडिने कर्मचारीहरु पनि यत्तिकै छन्। खाजा खान गयो भने घण्टौं बिताइदिन्छन्।

सरकारी कर्मचारीहरु काम नै नगर्ने भएपछि अख्तियार दुरुपयोग अनुसन्धान आयोगले केही महिनाअघि अनुसन्धानलाई तीव्रता दिएको थियो। कति जना त कारबाहीमा पनि परेका थिए। उता, तत्कालीन भूमि व्यवस्थामन्त्री शशी श्रेष्ठले त कित्ताकाट नै रोकिदिएकी थिइन्। सरकारी कर्मचारी डेसमै जग्गा देखाउन, नापजाँच गर्न पुगेपछि उनले कडाइ गरेकी हुन्।

तैपनि कर्मचारीहरुले आफ्नो व्यवहारमा सुधार गरेका छैनन्। उनीहरुको अझैपनि चेत खुलेको छैन्। सरकारी कर्मचारी पढेलेखेका व्यक्ति हुन्। उनीहरु सही र गलतको फरक छुट्याउन सक्छन्। लोकसेवा आयोगको परीक्षा पास गरेर उनीहरु यस क्षेत्रमा प्रवेश गरेका हुन्छन्।

भनिन्छ नि,'पढेकोभन्दा पनि परेकोलाई बढी ज्ञान हुन्छ।' सरकारी कर्मचारी जति शिक्षित भएपनि के गर्ने, बैंकले एक सय रुपैयाँमा किनेको सेयर २९ सयमा किन्नुहुँदैन् भन्ने थाहा छैन्। उसले ३२ सयमा बेच्नका लागि किनेको हो। सरकारी रेट आनाको एक लाख भएको जग्गालाई ६०-७० लाख हाल्ने सरकारी कर्मचारी हुन्।

जबकि, उनीहरुलाई त्यो गैरकानुनी छ भन्ने स्पष्ट जानकारी छ। उनीहरुले अर्कालाई 'मुर्गा' बनाउनकै लागि सो जग्गा खरिद गरेका हुन्। कानुनमा स्पष्ट लेखिएको छ, कसैलाई ललाईफकाई गरेर, कसैको आपतविपतको फाइदा उठाएर, बाध्य बनाएर सम्पत्ति लिन पाइँदैन्। त्यसो गरेमा त्यस व्यक्तिमाथि कानुनबमोजिम कारबाही हुन्छ।

कसैले कर्जा लगानी गरेको छ भने १० प्रतिशतभन्दा बढी ब्याज र सेवाशुल्क लिन पाइँदैन्। सरकारी कर्मचारीहरुले नै एक करोड रुपैयाँ पर्ने घरजग्गा राखेर २० देखि २५ लाख रुपैयाँ दिन्छन्। तीन महिनादेखि एक वर्ष टाइम दिने, महिनैपिच्छे ब्याज लिन्छन्। कुनले एक महिनाको दुई हजार, कुनैले तीन हजार ब्याज लिन्छन्।

मालपोतमा पास गर्दापनि ऋणीले नै राजश्व तिर्नुपर्छ। दलालीलाई पनि पाँच प्रतिशत दिनुपर्छ। यो धन्दामा बहालवाला र भूपू दुवै कर्मचारीको संलग्नता छ। सरकारी कर्मचारीहरुले लोकसेवाको परीक्षा दिँदा हामी देश र जनताको लागि काम गर्छौं भनेका हुन्छन्। उनीहरुले आफूभन्दा माथि सँधै देश र जनतालाई राख्नुपर्छ।

तर, उनीहरुले नै जनतालाई धुरुक्कै बनाएका छन्। सरकारले सरकारी कर्मचारीलाई निकै छुट दिएको छ। एक जनाले गर्न सक्ने कामका लागि २० जना राखिएको छ। हल्लिएकै भरमा उनीहरुले तलब खाइरहेका छन्। तैपनि सहज रुपमा जनतालाई सेवा दिन सक्दैनन्। जनताले तिरेको कर वालुवामा पानी बराबर भएको छ।

सरकारी कर्मचारीमा लगानी बेकार साबित भइसकेको छ। काठमाडौंमहानगरपालिकामा प्रमुख प्रशासकीय अधिकृत नभएको तीन महिना बितिसकेको छ। प्रमुख प्रशासकीय अधिकृत नहुँदा सर्वसाधारणले दुःख पाएका छन्। महानगरबासीले सेवा पाउन सकेका छैनन्। प्रमुख प्रशासकीय अधिकृत नहुँदा समस्या भएको भनि मिडियाले लेखेको लेख्यै छन्।

तैपनि, प्रधानमन्त्री केपी शर्मा ओलीको ध्यानाकर्षण हुन सकेको छैन्। व्यक्तिसँगको जुहारी ठूलो कि सर्वसाधारणले पाएको दुःखहैरानी ? यत्रो मिडियाले लेख्दा त प्रधानमन्त्री ओलीको ध्यान केन्द्रित हुन सकेको छैन् भने अन्य कर्मचारीले के गर्छन् ? कता जान्छन् ? उनलाई के थाहा ?

पुल्चोक इन्जिनियरिङ क्याम्पसमा आयोजित एक कार्यक्रमका बीच सबै मन्त्रीका स्वकीय सचिव हटाउन प्रधानमन्त्री ओलीको ध्यानाकर्षण गराए। उनीहरुले एकै स्वरमा भनेका थिए,'मन्त्रीका स्वकीय सचिवले पैसा पाए भने नहुने काम पनि गरिदिने, पैसा पाएनन् भने हुने काम पनि नगरिदिने। यसले गर्दा बेतिथि बढ्यो, हामीले पनि काम गर्न सकेनौं।'

अहिले त सांसदहरुले पनि स्वकीय सचिव राखेका छन्। आफन्तलाई स्वकीय राख्ने, जनताले तिरेको करबाट तलब खुवाउने, सेवासुविधा दिने। स्वकीय सचिवको काम नै घुसको पार्किङ्ग गर्ने, सरुवा बढुवा गर्ने, ठेक्कापट्टा मिलाउने भएको छ। कर्मचारी पनि घुसखोरी, नेता पनि।

नगर प्रहरीहरु पनि त्यसै गर्ने। घाम ताप्ने, कहाँबाट कमिशन आउँछ भन्दै ढुकेर हिंड्ने। नेता दलाली, सरकारी कर्मचारी दलाली, नगर प्रहरी दलाली अनि देश कसरी उमो लाग्छ ? जो दलाली पेशामा छन्, उनीहरु भन्दापनि बढी दलाल गर्ने भए यिनीहरु। सदन चलेको एक महिना बितिसकेको छ।

राष्ट्रपति रामचन्द्र पौडेलले सहकारीसम्बन्धी अध्यादेश प्रमाणिकरण गरेको पुसमै हो। तर, अहिलेसम्म त्यो पारित भएको छैन्। सदनमा दर्ता नै गरिएको छ। सहकारीका कारण करोडौं जनताको बिल्लीबाठ भएको छ। त्यो ऐन किन सदनमा दर्ता नगरेको ? सांसदहरु बोल्दैनन्।

भूमिसम्बन्धी ऐन पास नहुने भएपछि प्रधानमन्त्री ओलीले सहकारीको अध्यादेश पनि फेल गराइदिने भए। आफू झापाको गिरीबन्धु टी स्टेटको जग्गा हिनामिनाबाट बच्नका लागि ल्याएको भूम अध्यादेश पारित नहुने भएपछि किन सहकारीको अध्यादेश पारित गर्ने ? भन्ने उनलाई लागेको छ।

हुन त यहाँ जो पनि आफ्नो व्यक्तिगत स्वार्थ हेर्ने मात्र छन्। कसैले देश र जनताको बारेमा सोच्दैनन्। सांसदहरु सदनमा जान्छन्, हाजिरी भत्ता लिन्छन्, हिँडिहाल्छन्। जब सरकारले विधेयक पेश गर्छ, संख्या पुगेर फेल हुन्छ। सांसदहरु तलब लिने, भत्ता लिने, सरकारी गाडीको दुरुपयोग गर्ने।

सरकारी कर्मचारीले पनि त्यही सिको सिके। काम नै नगरिकन मासिक तलब बुझ्ने, सरकारी सवारीको दुरुपयोग गर्ने अनि कार्यालय समयमा व्यक्तिगत आम्दानीको स्रोत खोज्दै हिँड्ने। अमेरिकाले नेपाललाई 'ठग' भनेको छ। तर, हामीले प्रतिवाद गर्न सकेनौं। किन कि उसले भनेको सतप्रतिशत सही छ।

नेता र सरकारी कर्मचारीले अन्तर्राष्ट्रिय स्तरमा नेपालको बद्नामी गराएका छन्। यताबाट ल्याएको छन् खाएका छन्, उताबाट ल्याएको छन् खाएका छन्। नेता र सरकारी कर्मचारीको कारण जनताको समेत बेइज्जत भएको छ। राजनीतिक दल र नेताले देशलाई यसरी डुबाए, कि बाउडिन पनि गाह्रो छ।

भक्तपुर

# ललितपुरमा गुड्न थाल्यो ई-बग्गी, एक महिना नि:शुल्क यात्रा गर्न पाइने



काठमाडौं । ललितपुरको पुल्चोक, महापाल, मंगल बजार, पाटन सुन्धारा हुँदै बुद्ध बिहारसम्म ई-बग्गी (इलेक्ट्रिक रिक्सा) गुड्न थालेको छ । फागुन १९ अर्थात् सोमबारदेखि ललितपुरका यी ठाउँमा ई- बग्गी चल्न थालेको हो । ललितपुर महानगरपालिकाका नगर प्रहरी प्रमुख सीताराम हाछेथुले बिहान १० देखि साँझ ६ बजेसम्म पुल्चोकदेखि बुद्ध विहारसम्म ई-बग्गी पुग्दै फर्किरहेको जानकारी दिए ।

उनका अनुसार परीक्षण अवधिभर यो बग्गीमा नि:शुल्क यात्रा गर्न सकिनेछ । "ललितपुरमा पर्यटकहरू घुम्न त आउँछन् । तर उनीहरू पाटन दरबार स्क्वायर र मंगलबजारमा मात्र सीमित छन् । उनीहरूलाई ललितपुरको अन्य पर्यटकीय स्थलमा पनि घुमाउने उद्देश्यले परीक्षण गरिरहेका छौँ," उनले भने ।

परीक्षण सफल भए एक महिनापछि थप ४ ओटा ई-बग्गी किन्ने र व्यावसायिक रूपमा सञ्चालनमा ल्याउने योजना रहेको हाछेथुले सुनाए । उनका अनुसार भविष्यमा लगनखेल, कुमारी पाटी जावलाखेल हुँदै पुल्चोक फर्कने रुटमा चलाउने गरी योजना बनेको छ । "यो रिक्सा सानो गल्लीमा पनि जान सक्छ । विद्युतीय भएका कारण वातावरणमैत्री पनि छ," उनले भने ।

# ओबीसी आरक्षण लागू गर्न माग गर्दै



काठमाडौं । नेपाल पिछडावर्ग (ओबीसी) महासंघले पाँचबुँदे माग राख्दै सोमबारदेखि आन्दोलन सुरु गरेको छ । पिछडावर्ग महासंघले काठमाडौंको माइतीघर मण्डलामा अनिश्चितकालीन धर्ना सुरु गरेको हो ।

उपेक्षित, उत्पीडित र दलित वर्ग उत्थान विकास समिति, पिछडिएको समुदाय (ओबीसी) उत्थान विकास समिति र वादी समुदाय उत्थान विकास समितिहरुलाई यथाशीघ्र सञ्चालन गर्न मागसहित पिछडावर्ग महासंघ आन्दोलित भएको छ ।

तीनवटा विकास समितिहरुमा रिक्त रहेको पदमा यथाशीघ्र पदाधिकारीहरु नियुक्ति गर्नुपर्ने, राष्ट्रिय समावेशी आयोगले पिछडावर्गको थर सूचिकरणका लागि गरिएको सिफारिस मन्त्रिपरिषद्बाट पास गरी यथाशीघ्र ओबीसी आरण लागू गर्न माग महासंघले गरेको हो ।

यसैगरी, नेपाल सरकार र नेपाल पिछडावर्ग (ओबीसी) महासंघ, दलित संघ तथा वादी समुदायबीच भएको सम्झौताहरु लागू गर्नुपर्ने र तीनवटै विकास समितिमा लामो समयदेखि कार्यरत अवकासित कर्मचारीलाई यथाशीघ्र पुन: नियुक्ति गर्न माग गरेको छ ।

ओबीसीका यी मागहरु सरकारले पूरा नगरेसम्म आन्दोलन जारी रहने महासंघका अध्यक्ष गजेन्द्र ठाकुरले बताएका छन् । उनले भने, 'अहिले हामी शान्तिपूर्ण धर्नामा बसेका छौं, हाम्रा मागहरुप्रति सरकारले बेवास्ता गरे जक्काजामसम्मको कार्यक्रम गर्न बाध्य हुनेछौं ।'

'नेपाल पिछडावर्ग (ओबीसी) महासंघले नेपाल सरकारका गलत रबैयाका कारण फेरि अन्दोलनमा जान बाध्य भएको छ । सरकारमा बस्ने अधिकांश नेताहरु आफ्नो स्वार्थ पूरा गर्नका लागि दलित, मुस्लिम, आदिवासी, जनजाति, बादि सामुदाय र पिछडावर्ग पर्ने जातजातिहरूको हकअधिकारवाट बंचित गरेका छन् । संघदेखि पालिकासम्म लक्षित वर्ग शीर्षक बजेट सबै भष्ट्राचार गरिन्छ । नेपाली जनताहरू आआफ्ना अधिकारको लागि नेपाल सरकारसँग लडेर अधिकार सुनिश्चित गराउनु पर्नेछ ।' उनले भने ।

'ओबीसीको थर सूचिकरण गरी आरक्षण लागू गर', 'पिछडावर्ग, दलित र वादी समुदायसँग पटक-पटक भएका सम्झौताहरु लागू गर' र जबरजस्ती अवकास गरेका तिन वटै समितिका कर्मचारीहरुलाई पुन: बहाली गर' लगायतका ब्यानरसहित धर्ना कार्यक्रम सुरु गरेको हो ।

# जिप्रका भक्तपरद्वारा खाद्यान्न र ग्यास पसलमा अनुगमन

भक्तपुर । जिल्ला प्रशासन कार्यालय भक्तपुरद्वारा आइतबार सूर्यविनायक नगरपालिका बालकोटका तीन वटा खाद्यान्न पसलहरु अनुगमन गरियो । बालकोटस्थित सीता खाद्य स्टोरमा नगरपालिकामा दर्ता नभएकोले स्थानिय पालिकामा ७ दिनभित्र दर्ता गर्न निर्देशन दियो भने मूल्यसूचिमा जती लेखिएको छ, त्यतिमा मात्र विक्री गर्न निर्देशन दिइयो ।

अनुगमनमा विनायक स्टोरलाई म्याद नाघेको बस्तुहरु राख्ने छुटै ठाउँको व्यवस्था गर्न निर्देशन दिए । त्यस्तै माँ राजदेवी मसला सप्लायर्समा मूल्य सूची देखिने ठाउँमा राख्न, ढक तराजु नविकण गर्न, स्थानीय पालिकामा ७ दिनभित्र दर्ता गर्न, अनुज्ञापत्र लिएर मात्र प्याकिङ्ग गर्न निर्देशन दिइयो । त्यस्तै गट्टाघर जि. के. एस. इन्टरप्राइजेनमा म्याद नाघेको सोया सस २० वटा, सुर्ती ५ पाकेट जफत गरी नस्ट गरिया भने म्याद गुज्रेको सामानहरु राख्न छुटै ठाउँको व्यवस्था गर्न निर्देशन दियो । त्यस्तै ए. एण्ड. ए. ट्रेर्डस सूर्यविनायकमा ग्यास बिक्री गर्दा तौल गरेर मात्र बिक्री गर्न, गोदाम व्यवस्थित गर्न र खरिद गरेको ग्यास भन्दा विक्री गरेको ग्यास १५० वटा ग्यास नपुगेकोले उपभोक्ता संरक्षण ऐन २०७५ को विभिन्न दफा उल्लंघन गरेकोले निजलाई रु. १००००/- जरिवाना गरेको थियो । अनुगमनकै क्रममा सूर्यविनायकस्थित दीप किराना स्टोरमा खरिद विल अनुसार १९९ वटा ग्यासको बिक्री बिल नभएकोले उपभोक्ता संरक्षण ऐन २०७५ को विभिन्न दफा उल्लंघन गरेकोले निजलाई रु. १००००/- जरिवाना गरेको थियो ।

जिल्ला प्रशासन कार्याल भक्तपुरको नेतृत्व गरिएको अनुगमनमा प्रशासकीय अधिकृत शिव काकी, उद्योग तथा वाणिज्य कार्यलय भक्तपुर कार्यालय प्रमुख रामप्रसाद कुस्मा, जिल्ला प्रशासन कार्यालयका नासु यादव मिश्र, आन्तरिक राजश्व कार्यालयका प्रतिनिधि देवानन्द तिमिल्सिना, सूर्यविनायक नगरपालिकाका अधिकृत लोकनाथ खतिवडा, भक्तपुर उद्योग वाणिज्य संघका विश्वराम दुवाल, उपभोक्ता मञ्च भक्तपुरका मनोज थापा, उद्योग तथा वाणिज्य कार्यालय भक्तपुरका प्रतिनिधि लक्ष्मीप्रसाद कासुला र महानगरीय प्रहरी प्ररिसरका सुरक्षाकर्मीको सहभागी थियो ।

# फेसबुक म्यासेन्जरको रङ फेरियो



काठमाडौं । फेसबुक म्यासेन्जरको रङ फेरिएको छ । इन्स्टाग्रामसँग मिल्ने गुलाबी, बैजनी र निलो रंगको ग्रेडियन्ट रङबाट म्यासेन्जर निलो रङमा फर्किएको हो । सन् २०२० को अन्त्यतिर मेटाले म्यासेन्जरको डिजाइन परिवर्तन गर्दै गुलाबी, बैजनी र निलो रंग प्रयोग गरेको थियो ।

अहिले भने कम्पनीले म्यासेन्जरलाई पछिल्लो अपडेटमा आफ्नो पूरानै निलो रङसहित सार्वजनिक गरेको हो । मेटाका सबै प्लेटफर्मको डिजाइन वा ब्रान्ड कलरलाई समान देखाउने किसिमले कम्पनीले रङ फेरेको आंकलन छ ।

यो डिजाइन स्थायी हो वा नयाँ आउने कुनै डिजाइनको हिस्सा हो भन्ने स्पष्ट भने छैन । प्लेस्टोर वा एपस्टोरबाट अपडेट गरी म्यासेन्जरलाई नयाँ रङमा प्राप्त गर्नसकिन्छ ।

# चियामा ब्राउन सुगर स्वास्थ्यको लागि कति सुरक्षित !

एजेन्सी । आजकल मानिसहरु सेतो चिनीले हुने हानि देखेर, खैरो चिनी प्रयोग गर्न थालेका छन् । ब्राउन सुगरमा केही पोषक तत्वहरू हुन्छन्, तर यसलाई सीमित मात्रामा मात्र सेवन गर्नु उपयुक्त हुन्छ । यसको अलावा मह, गुड़ वा स्टेभिया राम्रो विकल्प हुन् ।

चिया प्रेमीहरूले गुलियो चियाको आनन्द लिनु सामान्य कुरा हो, तर सेतो चिनीको हानिको बारेमा जागरूकता बढेपछि, मानिसहरूले यसको विकल्प खोज्न थालेका छन् । ब्राउन सुगर एउटा यस्तो विकल्प हो जुन सेतो चिनी भन्दा स्वस्थकर मानिन्छ । तर के चियामा ब्राउन सुगरको प्रयोग स्वास्थ्यको लागि साँच्चै राम्रो हो ? सेतो चिनी र खैरो चिनीमा के फरक छ र स्वास्थ्यको लागि कुन विकल्प सही हुनेछ जानौं ।

सेतो चिनी बढी परिष्कृत र प्रशोधित हुन्छ, जसका कारण यसमा रहेका पोषक तत्वहरू जिरोको बराबर हुन्छ । अर्थात यसमा कुनै पनि प्रकारको पौष्टिक तत्व हुँदैन । यो मात्र स्वादकोलागि अर्थात गुलियोको लागि प्रयोग गरिन्छ । खैरो चिनी कम प्रशोधन गरिन्छ र यसमा गुड़ (गुड़ तत्व) हुन्छ, जसले यसलाई हल्का खैरो बनाउँछ । सेतो चिनीमा सुक्रोज मात्र हुन्छ र यसले अन्य कुनै पोषक तत्व प्रदान गर्दैन। ब्राउन सुगरमा थोरै मात्रामा क्याल्सियम, आइरन, पोटासियम र म्याग्नेसियम पाइन्छ । धेरै सेतो चिनी खाँदा मोटोपना, मधुमेह र मुटु रोग जस्ता समस्याहरू हुन सक्छन् । ब्राउन सुगरमा पनि लगभग उस्तै क्यालोरी हुन्छ, तर यसलाई पाचनको लागि हल्का मानिन्छ ।

चियामा ब्राउन सुगर हाल्नु ठीक हो ?

ब्राउन सुगरले चियाको स्वाद हल्का कारमेल बनाउन सक्छ । यो सेतो चिनी भन्दा अलि राम्रो विकल्प हुन सक्छ, तर यसलाई बढी सेवन गर्नु हानिकारक पनि हुन सक्छ । ब्राउन सुगर र सेतो सुगर दुवैको ग्लाइसेमिक इन्डेक्स लगभग समान हुन्छ, त्यसैले मधुमेहका बिरामीहरूले यसलाई सीमित मात्रामा सेवन गर्नुपर्छ । सेतो चिनीको तुलनामा ब्राउन सुगर हल्का हुन्छ र पाचनको लागि अलि राम्रो हुन सक्छ ।

कुन विकल्प राम्रो हुनेछ ?

यदि तपाई चियामा सेतो चिनीको स्वस्थ विकल्प खोज्दै हुनुहुन्छ भने, खैरो चिनी भन्दा मह, गुड़ वा स्टेभिया राम्रो हुन सक्छ । यसमा एन्टिअक्सिडेन्ट हुन्छ र यो घाँटीको लागि फाइदाजनक हुन्छ । यसमा आइरन र खनिजहरू हुन्छन्, जुन स्वास्थ्यको लागि राम्रो हुन्छन् । स्टेभिया एक प्राकृतिक गुलियो पदार्थ हो, जुन मधुमेह र तौल घटाउनको लागि राम्रो विकल्प हुन सक्छ ।

# जंकफुडले हुनसक्छ मस्तिष्कमा गम्भीर असर !

काठमाडौं । के तपाईं पनि जंकफुड, जस्तै बर्गर, पिज्जा, फ्रेन्च फ्राइज खाएर आफ्नो भोक मेटाइरहनु भएको छ? यदि हो भने, सचेत हुनुहोस्।

किनकि हालै गरिएको एक अध्ययनले यो देखाएको छ कि यस्ता खानेकुराले मस्तिष्कको कार्यक्षमता र व्यवहारमा गम्भीर असर पुऱ्याउँछ। यसबाट मस्तिष्क प्रभावित हुन सक्छ। जंकफुडको बारेमा पहिले नै सचेत गराइएको छ।

विश्व स्वास्थ्य संगठनका अनुसार संसारमा सबैभन्दा धेरै मृत्यु हृदय रोगका कारण हुन्छ। जसको एक कारण जंकफुड पनि हो। अमेरिकी अल्जाइमर एसोसिएशनको अन्तर्राष्ट्रिय सम्मेलनमा प्रस्तुत गरिएको एक अनुसन्धानमा यसो भनिएको छ कि बढी अल्ट्रा प्रोसेस्ड फुड, अर्थात् जंकफुड खाने व्यक्तिहरूमा गम्भीर डिमेन्सिया हुने खतरा हुन्छ। यो एक यस्तो रोग हो, जसमा स्मरण क्षमता, भाषा, निर्णय क्षमता र सोच्ने शक्ति घट्न थाल्छ। जंकफुडले मस्तिष्कमा के-के असर पार्न सक्छ भन्ने कुरा हेरौं :

जंकफुड खानेले मस्तिष्कमा के असर पार्न सक्छ ?

स्मृति र निर्णय क्षमता बिग्रन सक्छ- जंकफुड हाम्रो मुटुको लागि खतरनाक छ। यसले मस्तिष्कमा पनि त्यत्तिकै असर पुऱ्याउँछ। यसमा पाइने ट्रान्सफ्याट र चिनीले मस्तिष्कको स्मृति र निर्णय क्षमता धेरै प्रभावित गर्न सक्छ। लामो समयसम्म यसको सेवनले डिमेन्सिया जस्तो गम्भीर रोगको कारण बन्न सक्छ।

मस्तिष्कको संरचना बिग्रन सक्छ- उच्च क्यालोरी जंकफूडले मस्तिष्कको संरचनामा नकरात्मक असर पुऱ्याउँछन्। यसमा रहेका उच्च चिल्लो र चिनीले मस्तिष्कको हिप्पोक्याम्पस क्षेत्रलाई प्रभावित गर्छ, जुन भाग स्मरण शक्ति र सिकाइका लागि अत्यन्त महत्त्वपूर्ण हुन्छ। बढी जंकफुडको सेवनले हिप्पोक्याम्पसका न्यूरोनलाई हानि पुऱ्याउन सक्छ।

न्यूरोट्रान्समिटरको असन्तुलन हुनसक्छ- जंकफुड खानेले मस्तिष्कमा न्यूरोट्रान्समिटरको असन्तुलन हुन सक्छ। यी केमिकलहरूले मस्तिष्कका विभिन्न भागमा सन्देश पठाउने काम गर्दछन्।

उच्च क्यालोरी जंकफुडले डोपामाइनको स्तर बढाउँछ, जुन मानवीय मूडसँग जडित छ। डोपामाइनले कुनै कुराप्रति लत लाग्न सक्छ र यसले जंकफुड बढी खाने इच्छा बढाउन सक्छ।

मानसिक स्वास्थ्यमा असर पुऱ्याउन सक्छ-उच्च क्यालोरी जंकफुड खानले मानसिक स्वास्थ्यमा गम्भीर असर पार्न सक्छ। यसले आवश्यक पोषक तत्वहरूको कमी गर्न सक्छ। जसका कारण डिप्रेसन, तनाव र चिन्ता बढी हुन सक्छ। ट्रान्सफ्याट र चिनीको अधिक मात्राले मस्तिष्कमा असर गर्छ।

व्यवहार परिवर्तन हुनसक्छ-उच्च क्यालोरी जंकफुड खानले व्यवहारमा परिवर्तन ल्याउन सक्छ। यसले चिडचिडापन, आलस्य र जीवनबाट थकान जस्ता समस्या उत्पन्न गर्न सक्छ।

जंकफुडले क्रोधी र आक्रामक बनाउन सक्छ। यसमा रहेका केमिकलले मस्तिष्कको ती भागमा असर पुऱ्याउँछन्, जुन भावनाहरू र व्यवहारलाई नियन्त्रण गर्छ।

# विकास, कार्यान्वयन र फाइदामा जनताको प्रत्यक्ष सहभागिता जरुरी

वरिष्ठ अधिवक्ता दिनेश त्रिपाठी

काठमाडौंले त्यहाँको स्थानीय समुदायको जुन अनुभव र चाहना हो त्यसलाई गम्भीरतापूर्वक सुन्न जरुरी छ । छलफल जरुरी छ । विकास भनेको एक पक्षीय प्रक्रिया होइन । यो पनि एउटा प्रजातान्त्रिक प्रक्रिया हो ।

जसरी प्रजातन्त्रको परिभाषा गर्दाखेरि 'प्रजातन्त्र भनेको जनताद्धारा, जनताका लागि' भन्छौं, त्यसैगरी विकासको बारेमा पनि के भनिन्छ भने विकासको डिजाइनमा, कार्यान्वयनमा र त्यसको फाइदाको बाँडफाँडमा जनताको प्रत्यक्ष सहभागिता हुन जरुरी हुन्छ । त्यस कारण प्रजातन्त्र र विकास भनेको उस्तै हो ।

काठमाडौंले स्थानीय अनुभव के छ, त्यहाँको सांस्कृतिक मूल्य मान्यता के छ, त्यो कुरा पहिला बुझ्नुपर्‍यो, त्यसको अध्ययन हुनुपर्‍यो । पहिला त विकास के हो यो बुझ्न जरुरी छ । विकासको बुझाइमा धेरै ठुलो प्याराडाइम सिफ्ट भइसकेको छ ।

संयुक्त राष्ट्रसंघको घोषणा छ, विकासको अधिकार । विकासको अधिकारलाई समग्र प्रक्रिया भन्छ । सामाजिक अर्थतन्त्र, सांस्कृतिक, मानव विकास लगायत सबै कुराको समग्र तस्बिर चाहिन्छ । आर्थिक विकास भएर मात्रै हुँदैन, आर्थिक विकासले पनि एक थरीलाई विजय बनाउँछ भने एक थरीलाई हराउँछ ।

तर, जुन आर्थिक विकास हो, यो समाज कल्याण, समाज विकास र मानव विकास भएको हुन्छ । खाली विकास भएर मात्रै भएन । पछिल्लो समय भारतमा धेरै खर्बपति भएको विषयलाई एकजना अर्थविद्ले भनेका छन् कि यो त भारतको लागि खराब कुरा हो । धेरै खर्बपति हुनु यो राम्रो लक्षण होइन । यसको अर्थ के हो भने मध्यम वर्ग सबै सखाप हुँदै छ । केही व्यक्तिहरूमा मात्रै देशको सम्पत्ति केन्द्रित भइरहेको छ । अनि बाँकी मान्छे भिख माग्ने स्थितिमा जाँदै छ । के हामीलाई पनि त्यस्तै विकास चाहिएको हो ? विकासको परिभाषामा पनि हाम्रो वास्तविक बुझाइ हुन जरूरी देखिएको छ ।

मुक्कुम्लुङको जुन विषय छ, त्यसको बारेमा छलफल खै भएको ? त्यसको सांस्कृतिक तथा परम्परागत मूल्य मान्यता के छ ?

विश्व सांस्कृतिक पुरातत्त्व भन्ने छ, नेपाल त्यसको पनि साझेदार राष्ट्र हो । 'पिस अफ इन्टरनेशनल ल' को दृष्टिकोणमा हामीले हेर्दाखेरी हरेक राज्यले सांस्कृतिक, प्राकृतिक सम्पदाहरूको संरक्षण गर्नुपर्छ ।

कसको लागतमा कसलाई नाफा हुन्छ भन्ने कुरा पनि विचार गर्नुपर्‍यो । विकास भनेको एउटा मानव प्रक्रिया हो । यो मानवीय सवाल हो । विश्वका अन्य मुलुक अमेरिका, भारत लगायतका सबै देशमा पनि प्राकृतिक तथा सांस्कृतिक सम्पदाको पक्षमा त्यहाँका अदालतले आदेश जारी गरेका छन् ।

भारतीय सुप्रिम कोर्टले रोजगार सिर्जना हुन्छ भनेर प्राकृतिक र सांस्कृतिक सम्पदालाई ध्वस्त गर्न पाइँदैन भनेको छ ।

यो कुरा पनि बुझ्न जरुरी छ । हामी कोही पनि विकास विरोधी छैनौं । तर, यहाँ अहिले स्थानीयहरूको कुरा सुनिएको छैन । तर, विकास भनेको त त्यहाँको लागि हो नि । उहाँहरूको लागि सामाजिक अपनत्व र स्वीकार्य हुनुपर्‍यो । उहाँहरूले हामीलाई चाहिँदैन भन्दा उहाँहरूलाई लठ्ठी हानेर, गोली चलाएर, थुनामा राखेर एकपक्षीय ढंगले काम गरेर कसको लागि फाइदा पुर्‍याउन खोजिँदै छ ?

राज्यसँग संयम हुनुपर्छ । नीतिगत तहको यति धेरै ठूलो विषय छ, तर, अहिले जुन कर्मचारीसँग निर्णय गर्ने क्षमता नै छैन उसलाई वार्ताको लागि पठाइएको छ । उच्च तहको राजनीतिक समूह पो पठाउनुपर्‍यो नी । त्यसमा सर्वसाधारण समूहको मान्छे, कानुनविद् पनि पठाउनु पर्‍यो । समाजले पत्याएको मान्छे पो पठाउनुपर्‍यो । एउटा कर्मचारी खरदार सुब्बा लगेर वार्ता गराउने ? त्यसबाट के नतिजा आउँछ ? यो मूर्खतापूर्ण हो । सरकारले यो गलत कदम चाल्दै छ ।

अहिले त नो केबलकारको कुरा आउँदै छ, भोलि 'मिस ह्यान्डल' भयो भने यसले एउटा भयावह परिस्थिति ल्याउन सक्छ । काठमाडौंको सत्तामा बसेका मान्छेले यो कुरा बुझ्नुपर्छ । संसारमा धेरै आन्दोलनहरू यसैगरी विकास हुने गर्छन् । एउटा भुट्टोको विषयलाई लिएर सुरु भएको आन्दोलनले पञ्चायत नै ध्वस्त भयो ।

त्यसैले नो केबलकारको विषय मात्रै होइन, हाम्रो विकासको प्रक्रियामा कहिल्यै हामीले स्थानीय समुदायसँग परामर्श भएको छ । उनीहरूलाई छनौटको अधिकार छ । हामी अन्तरर्ष्ट्रिय कानुनको साझेदार हौं । आर्थिक, सामाजिक र सांस्कृतिक अधिकारको सम्मेलनको भाग हौं । जैविक विविधताको नेपाल साझेदार हो ।

मुक्कुम्लुङ जैविक विविधताको धनी क्षेत्र हो । त्यो योजनाको डिजाइन र कार्यान्वयनको प्रक्रियामा स्थानीय सरोकार के छ ? स्थानीय मान्यता के छ ? त्यसको बारेमा कहिल्यै बुझ्ने कोसिस भएको छ ? यहाँ त राज्य नै हाइज्याक भएको छ । यो मुलुक यस्तो भएको छ, जहाँ व्यापारी, उद्योगपतिले भन्दा नेताले बढी पैसा कमाउँछ । किनभने नेताले पैसा जम्मा गर्ने काम गर्छ । त्यसपछि त्यो व्यापारीसँग मात्रै पैसा छ, जसले नेताको कोष व्यवस्थापन गर्ने गर्छ । हामीले यो विकासको प्रक्रियालाई प्रजातान्त्रीकरण गर्नुपर्‍यो । स्थानीय समुदायसँग सोधिनुपर्‍यो । नेपाल संयुक्त राष्ट्र संघको सदस्य हो, वास्तविक विकासको विषयमा अन्तर्राष्ट्रिय जुन परिभाषा छ, त्यसमा स्थानीय समुदायको अर्थपूर्ण सहभागिता हुनुपर्ने भनिएको छ । समुदायले अपनत्व गर्ने प्रक्रिया हुनुपर्‍यो ।

स्थानीय समुदायको कुरा नै नसुनेर काम गर्न मिल्छ ? कुनै पक्षमा नलिईकन हेर्दा पनि छलफल त हुनुपर्‍यो । काठमाडौंले कुरा त सुन्नुपर्‍यो नि । पूर्वी भाग राजनीतिक हिसाबले पनि नेपालको धेरै संवेदनशील क्षेत्र छ । त्यसको मिस ह्यान्डलिङ भयो भने राजनीतिक रुप लिनसक्छ ।

काठमाडौंका सत्तामा बसेका व्यक्ति जो छन्, उनीहरूले यो कुरा सोच्न जरुरी छ । यो मुलुकमा संकटको व्यवस्थापन गर्ने व्यवस्थापक नै छैन । तर, उनीहरूलाई के मात्रै थाहा छ भने लठ्ठी हान्नुपर्छ, गोली हान्नुपर्छ र मान्छेलाई समातेर थुन्नुपर्छ । पञ्चायती मानसिकताबाट ग्रस्त भएको यी बहुदलीय पञ्च हुन् की के हुन् यी ? सबै बहुदलीय पञ्च जस्ता छन् । नाम मात्रै बहुदल राख्दिएको छ ।

संवादको लागि गृहमन्त्री आफैं जान सक्दैन ? उच्च तहको समूह पठाउन सक्दैन ? अरू पार्टीको समूह जान सक्दैन ? कम्तीमा राजनीतिक पार्टीको मान्छेहरू त्यहाँ जानुपर्‍यो । उच्च तहको राजनीतिक नेतृत्व गएर छलफल गर्नुपर्‍यो । तपाईंहरूको मुख्य माग के हो ? विकल्प के हुनसक्छ ? कूटनीतिमा सीबीएम भनिन्छ, कन्फिडेन्स बिल्डिङ मिजर्स । त्यहाँ विश्वास आर्जन गर्ने माध्यम के हुन सक्छ ? अहिले त्यहाँ विश्वासको संकट देखिएको छ । उहाँहरूको मन भाँचिएको छ । उहाँहरूलाई हाम्रो संस्कृति, सभ्यता, मूल्य मान्यतालाई बुझ्ने कोसिस भएन भन्ने लागेको छ । त्यसको विकल्प के हुन सक्छ ? त्यो विषयमा बसेर छलफल गरौं । तर, सरकार छलफल नै गर्न चाहँदैन ।

एउटा समूहले राज्यलाई हाई ज्याक गरेको छ । उसले भन्छ, यही गर, यहाँभन्दा दायाँबायाँ हुँदैन । तर, राज्य भनेको त सबैको अभिभावक हो, जसको कोही पनि छैन, त्यसको राज्य छ । हामीले क्रोनी क्यापटिलिज्म गर्न खोजिरहेका छौं, तर, त्यसरी हुँदैन । विकास भनेको केहीको फाइदाका लागि सबैलाई ध्वस्त गर्ने भन्ने हुँदैन ।

हाम्रा नीति निर्माताहरूमा बौद्धिक दरिद्रता छ । यो भनेको धेरै संवेदनशील विषय हो । समाधानको सन्दर्भमा अहिलेसम्म जति पनि गिरफ्तारी गरिएका छन् तिनलाई रिहा गर्नुपर्‍यो । जसले अवस्थालाई सामान्यीकरण गर्छ । अब कसैलाई पनि धरपकड गरेर थुन्ने काम बन्द गर्नुपर्छ । त्यसपछि सबै पार्टीको सहभागितामा उच्च राजनीतिक संयन्त्र बनाएर अर्थपूर्ण संवाद गर्नुपर्छ । संवादको विकल्प संवाद मात्रै हो । (खबरहब डटकमले आयोजना गरेको छलफलमा व्यक्त विचार )

# रियलसँग सम्झौता नवीकरण भिनिसियसको चाहना

काठमाडौं । ब्राजिलका फरवार्ड भिनिसियस जुनियरले रियल मड्रिडसँग सम्झौता नवीकरण गर्ने चाहना व्यक्त गरेका छन् । भिनिसियसले मड्रिडमा आफू सन्तुष्ट रहेको जनाउँदै सकेसम्म सम्झौता चाँडो नवीकरण गर्ने बताएका हुन् ।

च्याम्पियन लिगअन्तर्गत अन्तिम १६ मा एट्लेटिको मड्रिडसँग प्रतिस्पर्धा गर्नुअघि आयोजित पत्रकार सम्मेलनमा उनले भने, "म धेरै संयमित छु । मेरो सम्झौता २०२७ सम्म लम्बिनेछ र म सकेसम्म चाँडो नवीकरण गर्न चाहन्छु, किनभने म यहाँ खुसी छु ।"

भिनिसियसले थपे, "म उत्कृष्ट खेलाडी, उत्कृष्ट कोच र उत्कृष्ट अध्यक्षसँग खेल्ने सपना साकार गर्दै छु । यहाँ सबैले मलाई धेरै माया गर्छन् ।"

उनले भने, "मैले उपाधि जितिसकेको छु, तर मैले धेरै उपाधि जित्न सक्छु र क्लबको इतिहास बनाउँछु । त्यो अलिक जटिल छ, किनभने क्लबमा धेरै लेजेन्डहरू आइसकेका छन् र म पनि उनीहरू जस्तै बन्न चाहन्छु ।" अघिल्लो महिना अन्तर्राष्ट्रिय सञ्चारमाध्यममा रियल र भिनिसियस सम्झौता नवीकरण गर्न सहमत भएको र त्यो कार्य अन्तिम चरणमा पुगेको जनाइएको थियो । फिफा मेन्स प्लेयर अफ दी इयर २०२४ को विजेता समेत रहेका भिनिसियसले रियलबाट खेल्ने आफ्नो बाल्यकालदेखिको सपना रहेको समेत बताए ।

उनले रियलका निम्ति १०२ गोल गरिसकेका छन् । रियल आइतबार रियल बेटिससँग २-१ ले पराजित भएको थियो । त्यो उनले खेलेको ३००औं खेल थियो ।

# च्याम्पियन्स लिग– लिभरपुल पिएसजीबीच पहिलो लेग

एजेन्सी - प्रिमियर लिगको शीर्षस्थानमा रहेको लिभरपुलले च्याम्पियन्स लिग अन्तिम १६ को पहिलो लेग पेरिस सेन्ट जर्मन (पिएसजी) सँग हुनेछ । आर्सनलले पिएसभी आइन्डहोभन तथा एस्टन भिल्लाले ब्रुगको सामना गर्नेछ । साविक विजेता रियल म्याड्रिडले नकआउट चरणको प्ले-अफमा म्यानचेस्टर सिटीलाई पराजित गरेको थियो । रियलले ला लिगा प्रतिद्वन्द्वी एट्लेटिको म्याड्रिडसँग खेल्नेछ । जर्मन डर्बीमा बायर्न म्युनिखले बायर्न लेभरकुसेनबीच प्रतिस्पर्धा हुनेछ । सन् २०१८-१९ पछि लिभरपुल र पिएसजीबीचको पहिलो भेट हुँदैछ । यि दुई टोलीको विजेताले क्वार्टरफाइनलमा एस्टन भिल्ला वा क्लब ब्रुगको सामना गर्नेछ ।

आर्सनलले पिएसभीलाई पराजित गरको खण्डमा १५ पटकको रेकर्ड विजेता रियल वा एट्लेटिकोलाई प्रतिद्वन्द्वीको रूपमा भेटाउनेछ । लिभरपुल र पिएसजीबीचको भिडन्त निकै रोमाञ्चक हुने अपेक्षा गरिएको छ । पिएसजी प्रतियोगिताबाट बाहिरिने स्थितिमा थियो । तर अन्तिम समयमा उत्कृष्ट प्रदर्शन गर्दै समूह चरणमा १५औं स्थानमा रहेर अन्तिम १६ मा प्रवेश गरेको थियो ।

पिएसजीसँग ओस्मान डेम्बेले रहेका छन् । उनी लिगको उत्कृष्ट स्कोररमध्ये एक हुन् । जारी सिजनमा उनले ६ गोल गरिसकेका छन् । लिभरपुलले फ्रेन्च क्लब विरुद्ध पछिल्ला ५ अवे खेल जित्न सकेको छैन । यदि लिभरपुलले लुइस एनरिकेको टोलीलाई हराए अप्रिलमा उनीहरूको सामना प्रिमियर लिग प्रतिद्वन्द्वी एस्टन भिल्लासँग हुनेछ । यसको लागि एस्टन भिल्लाले बेल्जियन च्याम्पियन क्लब ब्रुगलाई हराउनुपर्नेछ । आर्सनलको प्रतिद्वन्द्वी पिएसभी आइन्डहोभेन साविक डच च्याम्पियन हो । जसले जनवरीमा लिभरपुलको कमजोर टोलीलाई ३-२ ले पराजित गर्दै समूह चरणमा १४ औं स्थान हासिल गरेको थियो । आर्सनलले च्याम्पियन्स लिगको समूह चरणमा पिएसभीलाई तीन पटक हराइसकेका छ । जसमा पछिल्लो जित गत सिजनको ४-० को फराकिलो अन्तरको हो । अर्को तर्फ साविक विजेता म्यानचेस्टर युनाइटेड भने एफए कप पाँचौं चरणबाटै बाहिरिएको छ । फुलहमसँग आइतवार टाइब्रेकरमा ४-३ ले पराजित हुँदै युनाइटेड क्वाटरफाइनल पुग्न असफल रह्यो । फुलहम अन्तिम आठमा पुगेको छ । निर्धारित ९० मिनेट र थप ३० मिनेटको खेल १-१ गोलको बराबरीमा सकिएपछि खेल टाइब्रेकरमा गएको थियो ।

त्यसअघि निर्धारित समयमा पहिलो हाफको इन्ज्युरी समयमा केल्भिन बासेले गोल गर्दै फुलहमलाई अग्रता दिलाए । ७१औं मिनेटमा ब्रुनो फर्नान्डेसले गोल गर्दै खेलमा फर्काए । तर टाइब्रेकर युनाइटेड अभागी रह्यो । युनाइटेडले गतवर्षको फाइनलमा म्यानचेस्टर सिटीलाई हराएर उपाधि जितेको थियो । एफए कपमा युनाइटेड दोस्रो सर्वाधिक टोली हो । आर्सनलले १४ र युनाइटेडले १३ पटक एफए जितेको छ । एफए कपको अर्को खेलमा ब्राइटेनले न्युक्यासल युनाइटेडलाई २-१ ले हराउँदै क्वाटरफाइनलमा पुगेको छ ।

# च्याम्पियन्स ट्रफी : सेमिफाइनलमा भारत अस्ट्रेलिया र न्युजिल्यान्ड दक्षिण अफ्रिका

एजेन्सी । च्याम्पियन्स ट्रफी क्रिकेटको सेमिफाइनलमा भारतको भिडन्त अस्ट्रेलियासँग हुनेछ । आइतबार दुबईमा भएको दिवा रात्रि खेलमा न्युजिल्यान्डलाई ४४ रनले हराउँदै भारतले समूह 'ए' मा पहिलो स्थान हात पारेको हो । भारत र अस्ट्रेलियाबीच मंगलबार युएईमा पहिलो सेमिफाइनल खेल हुनेछ । न्युजिल्यान्ड र दक्षिण अफ्रिकाबीच दोस्रो सेमिफाइनल पाकिस्तानमा बुधबार हुनेछ ।

२५० रनको सामान्य लक्ष्य पाएको न्युजिल्यान्डलाई २०५ रनमा सीमित गर्ने क्रममा भारतका मिस्ट्री स्पिनर वरुण चक्रवर्तीले ५ विकेट लिए । उनले १० ओभरमा ४२ रन खर्चिएका थिए । यस सिजनको च्याम्पियन्स ट्रफीमा यो सबै भन्दा उत्कृष्ट बलिङ हो । न्युजिल्यान्डले ४५.३ ओभरमा सबै विकेट गुमाएको हो ।

पराजित टोली न्युजिल्यान्डका केन विलिम्सनले सर्वाधिक ८१ रन जोडे । आठौं क्रममा ब्याटिङ गरेका माइकल सान्टनरले २८ रन जोडे । यसअघि भारतलाई २४९ रनमा सीमित गर्नेक्रममा म्याट हेन्रीले ८ ओभरमा ४२ रन खर्चेर ५ विकेट लिएका थिएका थिए । भारतले ६.४ ओभरमा ३० रन जोडेर विराट कोहलीसहित तेस्रो विकेट गुमाएको थियो । भारतलाई उकास्ने क्रममा श्रेयास ऐयारले ७९, हार्दिक पाण्डेले ४५ तथा अक्षर पटेलले ४२ रन जोडेका थिए ।

## राजनीतिक...

यता, कांग्रेस प्रमुख सचेतक घिमिरे सरकारले राजनीतिक दलसम्बन्धी विधेयकबारे गम्भीर छलफल भइरहेको बताउँछन् । उनी यो विधेयककै रुपमा संसद्मा जाने दाबी गर्छन् । 'दफा ३३ को उपदफा २ निष्क्रिय छ । पहिलाको प्रावधानबाट केही घट्दैन । केन्द्रीय समिति र संसदीय दलको ४० प्रतिशतमा तलमाथि हुँदैन', घिमिरेले भने, 'यसमा कांग्रेस-एमालेले गहिरो अध्ययन र छलफल गरेका छन् ।'

०७८ सालमा अध्यादेश ल्याएपछि प्रतिस्थापन विधेयक ल्याउन नसक्दा राजनीतिक दलसम्बन्धी ऐनको दफा ३३ निष्क्रिय भएको थियो । त्यसपछि पुरानो ऐन विस्थापित भएर नयाँ ऐन पनि बन्न सकेको थिएन । दफा नै निष्क्रिय भएपछि त्यसलाई सक्रिय गर्न खोजिएको सत्ता पक्षका एकजना नेता बताउँछन् । अहिले यो दफा सक्रिय बनाउन गृह मन्त्रालय र कानुन मन्त्रालयले होमवर्क गरिरहेका छन् ।

विधेयक आए कुन-कुन दललाई समस्या ?

ऐनलाई सक्रिय बनाएर सरकारले ०७८ मा एमालेबाट विभाजन गरेको नेकपा एकीकृत समाजवादी फुटाउन लागेको चर्चा चलेको छ। यस्तै रास्वपातिर पनि कांग्रेसको नजर परेको छ। उपेन्द्र यादव छाडेको अशोक राई नेतृत्वको जसपा पनि आफूतिर तान्ने एमालेको रणनीति छ । तर, एकीकृत समाजवादीमा केही नेताहरूबीच मत मतान्तर भए पनि रास्वपामा गम्भीर मतभेद देखिँदैन ।

एकीकृत समाजवादीमा पनि सांसद र केन्द्रीय सदस्यको ४० कै अवस्थामा आए एमालेमा फर्किहाल्ने नेताहरूको संख्या कम छ । हिउँदे अधिवेशन सुरु भएको दिन गत माघ १८ गते प्रधानमन्त्री ओलीले दल विभाजनसम्बन्धी कानुन ल्याउने कुरा सरकारको मेन्युमा नभएको बताएका थिए । तर, यसबारे पछिल्लो पटक बालुवाटारमा पटक-पटक छलफल भएको उनीनिकट नेताहरू नै स्वीकार्छन् ।

## विद्यार्थीका ...

शाङ्ग्री स्कुलका सियविन महर्जन र सौभित महर्जनले सान्त्वना स्थान प्राप्त गरे । त्यसैगरी कक्षा ३ देखि ५का विद्यार्थीतर्फ डल्लु आवासीय विद्यालयकी सरिना महर्जन प्रथम, ईश्वर आधारभुत विद्यालयकी अनिशा परियार द्वितीय र दिव्यज्ञान माविका जष्टिन कार्की तृतीय भए । त्यसैगरी फ्यूचर स्टार स्कुल र विजेश्वर ज्ञान मन्दिर सैनिक विद्यालयका जोवा तामाङ र युनिका भुजेलले सान्त्वना स्थान प्राप्त गरे ।

यसअघि महोत्सवकै अवसरमा यहाँ २० भन्दा बढी कलाकार सहभागी भएर कला कार्यशाला आयोजना गरिएको थियो । महोत्सव फागुन १७ गते सम्पन्न भएको थियो ।

## नेपाल...

केन्द्रिय सदस्यहरुमा सुनिल प्रजापति, नन्दबहादुर शाही, डिल्लीप्रसाद काफ्ले, नगवराज कोइराला, जङ्गबहादुर शाही, नारायण महर्जन, सराजेराज गोसाई, उकेश कवां, सनकमान महर्जन, खगेन्द्रबहादुर शाही, कृष्णकुमार बैद्य, सुरेन्द्रराज गोसाई, रवीन्द्र ज्याख्व, अनुराधा थापामगर, कमलमैयाँ सुवाल, हरिसुन्दर बासी, राजवीर डंगोल, सुजना सैंजु, सरोजकुमार शाह, कृष्णबहादुर तामांग, मुक्ति यादव, योगेन्द्रमान विजुक्छें, बखत थापा, रमेशकुमार रावल, केशेन्द्रप्रकाश कार्की, खड्गराज शाही सर्वसम्मत केन्द्रिय सदस्य निर्वाचित भए । समितिमा चार जना बैकल्पिक सदस्यहरु चुनिए । उनीहरुमा मञ्जु चौधरी, विनोद विक, तुल्सी खड्का र प्रकाश गुरुङ रहेका छन् ।

महाधिवेशनले सात प्रदेशमा सात जना संयोजकहरु तोकिए । कोशी प्रदेशमा उकेश कवां, मधेशमा सुनिल प्रजापति, बागमतिमा प्रेम सुवाल, गण्डकीमा डिल्लीप्रसाद काफ्ले, लुम्बिनीमा हरिसुन्दर बासी, कर्णालीमा सरोजराज गोसाई र सुदुरपश्चिममा नवराज कोइराला संयोजक तोकिए । महाधिवेशनमा ५० जिल्लाहरुबाट करिब तीन सय ५० प्रतिनिधि पर्यवेक्षकहरु सहभागी भएको जनाइयो ।

पार्टीको आठौं महाधिवेशनको शुक्रबार भक्तपुरको सल्लाघारीमा उदघाटन भएको थियो । उदघाटन सत्रलाई सम्बोधन गर्दै अध्यक्ष विजुक्छेंले आफ्नो पार्टीबाहेक अहिलेसम्म झण्डै सबै पार्टीहरु सरकारमा गएको र अहिलेको यो अवस्था आउनुमा उनीहरु सबै दोषि भएको बताएका थिए । देशमा राजतन्त्र र प्रजातन्त्र वा लोकतन्त्रिक व्यवस्था दसकौं देखेको तर यो व्यवस्थाले जनताको कुनै हित नभएको भन्दै अब समाजवादी व्यवस्थाको अर्को विकल्प नभएको बताए । उनले ऐन कानुनमार्फत् देशद्रोही काम गर्ने सबैलाई कारवाही गर्नुपर्नेमा पनि जोड दिए ।

अधिवेशनमा पार्टी सचिव एवं संघीय सांसद् प्रेम सुवाल, केन्द्रिय सदस्य सुनिल प्रजापतिलगायतका वक्ताहरुले देशमा धैरै कम्युनिष्ट पार्टीहरु रहेको तर उनीहरुमध्ये आफूहरुको पार्टी मात्रै सच्चा कम्युनिष्ट पार्टी भएको दावी गरे । महाधिवेशनका लागि सातै प्रदेशबाट प्रतिनिधि, पर्यवेक्षकहरु तथा कार्यकर्ताहरु सहभागी रहेका पार्टीले जनाएको छ । उदघाटन अघि काठमाडौं कोटेश्वर, भक्तपुरका विभिन्न पाँच ठाउँहरुबाट छुटाछुटै जलुश भएको थियो

पार्टीको स्थापना विक्रम संवत् २०३१ साल माघ १० गते भएको थियो । पार्टीको पहिलो महाधिवेशन २०४७ सालमा रुपन्देही जिल्लाको भैरहवामा सम्पन्न भएको थियो । सातौं महाधिवेशनसम्ममा पार्टी संस्थापक अध्यक्ष नारायणमान विजुक्छे(रोहित)लाई नै सर्वसम्मत अध्यक्ष चुन्दै आएको छ । यसअघिको सातौं महाधिवेशनले विजुक्छेको अध्यक्षतामा २५ सदस्यीय केन्द्रीय समिति चयन गरेको थियो । २३ केन्द्रीय र २ जना वैकल्पिक केन्द्रीय सदस्य थिए ।

पार्टी केन्द्रीय सदस्य सरोजराज गोसाईले विभिन्न प्रतिवेदनमाथि छलफल जारी रहेकाले महाधिवेशन एक दिन लम्बिएको बताए । उनले भने, 'महाधिवेशन आगामी कार्यकालका लागि नेतृत्व चयन गर्दै सम्पन्न गर्ने भनिए पनि एक दिन लम्बिएको छ । पार्टीको विधान संशोधनबारे बहस, महाधिवेशनको घोषणापत्र तयारी, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय नीतिलगायत विषयमा छलफल गर्दा समय अपुग हुँदा एक दिन लम्बिएको हो ।'

पार्टीको स्थापना २०३१ माघ १० मा भएको थियो । त्यसपछि प्रथम सम्मेलन २०४७ पौष २८,२९ र ३० भैरहवामा, दोस्रो सम्मेलन २०५१ असोज ३ र ४ भक्तपुरमा, तेस्रो सम्मेलन २०५५ माघ १२,१४ र १५ भक्तपुरमा, चौथो महाधिवेशन २०६० भदौ ११, १२ र १३ भक्तपुरमा, पाँचौं महाधिवेशन २०६५ भदौ ६,७ र ८ काठमाडौंमा, छैटौं महाधिवेशन २०७० चैत २१,२२,२३ र २४ काठमाडौंमा, सातौं महाधिवेशन २०७६ असोज ३,४ र ५ भक्तपुरमा भएको थियो ।

## भक्तपुर...

गरी ११ वर्षमा १० औं पटक म्याद थप गरेर लागत बढाउँदै ३१ करोड पुग्दा पनि सडक निर्माण हुन सकेको थिएन । काम नभएपछि गत पुस अन्तिम साता सडक सुधार तथा विकास परियोजना निर्देशनालयले उक्त सडकको ठेक्का सम्झौता रद्द गर्ने निर्णय गरेको थियो ।

भ्रमण वर्ष अगाडि सडकको काम नहुने अवस्था आएपछि नगरपालिकाकै आन्तरिक स्रोतबाट स्तरोन्नति गर्नेगरी बोलपत्र आह्वान गरेको हो । नगरप्रमुख खत्रीले भने, "चाँगुनारायण नगरपालिकाले आयोजना गर्ने नगरकोट भ्रमण वर्ष नगरकोटको मात्रै नभई सिङ्गो देशको महोत्सव हो, यहीँ सडकका कारणले महोत्सवमा समस्या आउन दिनुहुँदैन । मैले जनतासँग प्रतिबद्धता गरेको छु, त्यो प्रतिबद्धता पूरा गर्दै भ्रमण वर्ष सफल पार्न नगरपालिकाले नै सडक स्तरोन्नति गर्न ठेक्का आह्वान गरेको हो ।"

केन्द्रीय सरकारको यो सडक पुनः स्तरोन्नति गर्न यसवर्ष बजेट नभएको र प्रक्रियामा जाँदा प्रक्रिया पूरा गर्ने लामो समय लाग्ने भएपछि नगरपालिका आफैं सक्रिय भएको उनले बताए । नगरप्रमुख खत्रीले सम्बन्धित मन्त्रालयसँग र सडक विभागसँग हाम्रो कुरा भएको छ । नगरकोट आउने पर्यटकलाई सहज हुने गरी खाल्डो पुर्ने र सडकको स्तरोन्नति गरेर कालोपत्र गर्छौं । सडकको पेटी बनाउने, ड्रेन बनाउने र बाँकी अरु काम केन्द्रीय सरकारले गर्नेगरी छलफल र त्यसैले कालोपत्रका लागि ठेक्का आह्वान गरेका बताएका छन् ।

भक्तपुर नगरकोट सडकका नगरपालिकातर्फका सवइन्जिनयर सनिश वनमालाले ठेक्का सम्झौता गरी वैशाखदेखि सडकका स्तरोन्नति सुरु हुने बताए । भत्केकोपाटीदेखि नगरकोटसम्म १५ किलोमिटर लामो सडक कालोपत्रको काम सम्झौता लगत्तै तीव्र गतिमा अघि बढाइने उनले बताए ।

## गायक...

नेवार समुदायको आत्मसम्मानमा चोट पुगेको निवेदनमा दाबी गरिएको छ (स्रोतः रातोपाटी डटकम)।

भक्तपुर निवासी कुमा सागर एक प्रतिभाशाली नेपाली गायक हुन् । उनको पूरा नाम सिद्धि सागर प्रजापति हो । आफ्नै सांगीतिक ब्याण्ड 'कुमा सागर एण्ड द ख्वपः' रहेको छ । उनले नेवारी परम्परागत र आधुनिक संगीतको अनौठो मिश्रण प्रस्तुत गरेर नेपाली संगीत क्षेत्रमा छुट्टै पहिचान बनाएका छन् । 'ओ चम्पा गन वाना', 'फुरफुरी', 'चमेली फूल' लगायत उत्कृष्ट गीतहरू गाएका छन्, जुन युट्युबमा चहारेर सुन्न, देख्न, रसास्वादन लिन सकिन्छ । मेटलदेखि भजनसम्म गाउँनेउनले धिम्या, सिछ्या, भुछ्या, खिं जस्ता परम्परागत बाजा अनि भक्तपुरे नेवारी परम्परालाई भ्याप्पै अँगोलेका छन् । उनकै शब्दमा आफ्नो बाजेले भजन गाउनु हुन्थ्यो । आमाले भजग गाऊ भन्नुहुन्थ्यो । गितार सिक्दै गर्दा आफूले आफैलाई हिरो लाग्थ्यो । उनी गायक र संगीतकार दुवै हुन् । परम्परागत लोकबाजा र भजन संगीतको शक्ति लिएर उनी नेपाली संगीतको आकाशमा एक झुल्को उज्यालो दिइरहेका छन् ।

घटना-२ 'ढोग दियाँ'

गत मङ्सिरमा चर्चित टिकटकर आयुष सिंह ठकुरी र उनकी आमा नानुबिचको जुहारी टिकटकमा भाइरल थियो । त्यो सिलसिला लामै समय चलेको थियो । त्यस क्रममा नानु पनि भाइरल बनिन् । विवादकै क्रममा सामाजिक सञ्जालले 'ट्रोल' गरेपछि आयुष र उनकी पत्नी एलिजे जमाली टिकटकबाट केही समय बाहिरिए । उनै आयुषकी आमा नानु टिकटक तथा सामाजिक सञ्जालमा आफ्ना अभिव्यक्ति दिँदा पहिले 'नमस्ते, ढोग दियाँ' भन्न थालिन् । उनको सिको गर्दै सामाजिक सञ्जालको भिडले यो शब्द प्रयोग गर्न थालेको हो (पुष्प भट्टः२०८१ पुस २४, नागरिकन्युज)।

सुदूरपश्चिम र कर्णालीको सेरोफेरोमा नजिकको मान्यजनलाई शिष्टाचार एवं आदरार्थी शब्दको रूपमा 'ढोग दियाँ' शब्द प्रयोग हुने गर्दछ । सामाजिक मूल्यमान्यताले भरिएको शब्दलाई उराठेउला मजाकले सुदूरपश्चिम क्षेत्रका सांस्कृतिक अभियन्ता तथा समुदायको ध्यानाकर्षण गरायो । देउडा संस्कृति संरक्षण प्रतिष्ठानले 'ढोग दियाँ' शब्दको दुरुपयोग भएको र सुदूरपश्चिमको मौलिकता, संस्कार र भाषा संस्कृतिलाई होच्याउने गीत-सङ्गीतप्रति खेद प्रकट गऱ्यो । 'हाम्रो परम्परा मौलिकता सभ्यता र संस्कारसँग जोडिएका ओजपूर्ण शब्दहरूलाई शिष्टताको खिल्ली उडाउने र अपहेलित गर्ने गरी दुरुपयोग तथा दिन प्रतिदिन काली कर्णालीको संस्कारको बेइज्जत हुनेगरी विभिन्न सामाजिक सञ्जालमा प्रकाशन तथा प्रसारण गरिँदै आएका अपाच्य गीत, सङ्गीत वा सामाजिक सञ्जालमा रहेका विषयवस्तुप्रति गम्भीर आपत्ति जनाउँदछौँ ।' प्रतिष्ठानले विज्ञप्तिमा भनेको छ ।

यसैगरी सुदूरपश्चिम प्रदेश सरकारको सुदूरपश्चिम प्रज्ञा-प्रतिष्ठानले 'ढोग दियाँ' शब्दको खिल्ली उडाउनु खेदपूर्ण रहेको भन्दै विज्ञप्ति निकाल्यो । 'सुदूरपश्चिम र कर्णालीको सेरोफेरोमा नजिकको मान्यजनलाई शिष्टाचार एवं आदरार्थी शब्दको रूपमा 'ढोग दियाँ' शब्द प्रयोग हुने गर्दछ । यो अत्यन्त शिष्टाचारको शब्द हो । सबैलाई ढोग दिइँदैन । पछिल्लो समयमा कुनै जाति समुदाय र भूगोललाई अपमानित हुने गरी 'ढोग दियाँ' शब्द विभिन्न सामाजिक सञ्चालन, स्टेज कार्यक्रम, टिकटक र गीत सङ्गीतमा देखिनु गलत कार्य हो । यस्ता किसिमका अस्वाभाविक एवं अपमानित हुने क्रियाकलाप नगर्न नगराउन प्रतिष्ठान सम्बन्धित सबैमा अपिल गर्दछ ।'

घटना-३ मधेसीको अपमान

कुरो २०७७ सालको हो । प्रदेश-२ सरकारले विभिन्न टेलिभिजन च्यानलमा प्रसारण हुने तीनवटा कार्यक्रम 'कोरोना बिर्साउने गफगाफ', 'ह्वाट्स द फ्लप' र 'जोगिन्दर बोले प्रणामजी' निर्माण र प्रसारण बन्द गर्नुपर्ने संघीय संचार मन्त्रालयलाई पत्राचार गरेको थियो । 'यी तीन टेलिभिजन कार्यक्रमसहित केही नेपाली चलचित्रमा सीमित व्यक्तिको रमाइलो तथा मनोरञ्जनका लागि कुनै खास वर्ग, समुदाय (मधेसी)लाई शब्द, अभिनय र संकेतमार्फत् होच्याउने, अपमान गर्ने, तल देखाउने र बेइज्जत गर्ने काम भइरहेको छ । यस्तो कार्यले राष्ट्रिय एकता तथा सामाजिक सद्भावमा खलल पुऱ्याउन सक्छ ।' पत्रमा भनिएको छ । त्यसरी आलोचनाकै बिचमा केही कलाकारले 'नमस्ते ढोग दियाँ' बोलमा गीत निकालेका छन्, गीतको शब्दले सांस्कृतिक महत्व बोक्दैन ।

संसारको भाषा

इथ्नोलोक (२०२४)ले संसारमा ७ हजार १६४ भाषा बोलिन्छन् । ४० प्रतिशत भाषाको वक्ता संख्या १ हजारभन्दा कम रहेका छन् । ७० प्रतिशत भाषाहरू आदिवासीले बोल्ने भाषा हुन् । संयुक्त राष्ट्रसंघले सन् २०२२ देखि २०३२ लाई अन्तर्राष्ट्रिय आदिवासी भाषा दशक घोषणा गरेको छ । नेपालमा बोलिने १२४ वटा भाषाहरूमध्ये ९३ वटा (७५%) भाषा आदिवासीले बोल्ने भाषा हुन् । भाषा विचार विनिमयको साधन मात्रै नभई, संस्कृतिको वाहक, ज्ञान तथा सभ्यताको खानी पनि हो । संरक्षण, संवर्धन गर्नुपर्ने सरकारको दायित्व भएकाले आवश्यक नीति नियम बनाइ कार्यान्वयन गर्ने भन्ने प्रतिवेदनमा उल्लेख पाइन्छ ।

भाषिक मानवअधिकार

इतिहासकार बाबुराम आचार्यकले 'वर्तमान राष्ट्रभाषा नेपाली अहिलेभन्दा केही दशकअघिसम्म 'पर्वते-बोली' र त्यसभन्दा अगाडि 'खश-कुरा' को नामले प्रसिद्ध रहेको थियो । सल्यान तथा प्युठानको बीचमा पर्ने 'सखिको-लेक' भन्दा पारितर्फबाट आएका खश-वर्गका आर्यहरू आबाद भई पन्ध्रौं शताब्दीको अन्त्यतिर कालीगण्डकी नदीको किनारमा 'पर्वत' नामक एउटा नयाँ राज्य खडा भएपछि त्यहीँ नै स्थानीय मगर, गुरुङ, थकाली आदि अन्य आग्नेयदेशी-वर्गका भाषा-परिवारका बोली बोल्ने नागरिकहरूसँगको सम्पर्क तथा सहवासले गर्दा त्यतिबेलाको 'खश-कुरा' मा पर्याप्त परिष्कार आएर यस भाषाले 'पर्वते-भाषा'को रूप ग्रहण गरेको देखिनाले त्यतिबेला यस भाषा वा बोलीको नाम 'पर्वते-भाषा' हुन् सहज तथा सार्थक पनि रहेको थियो । तर अहिले यस भाषाले आफूमा रहेको प्रचार तथा प्रसार पनि हुने विशिष्ट गुण तथा मिठासले गर्दा नेपाल-अधिराज्यको राष्ट्रभाषाको रूप ग्रहण गरिसकेकोले अब यस भाषा वा बोलीलाई 'खश-भाषा' वा 'पर्वते-बोली' भन्दै रहनु उपयुक्त देखिँदैन । राजा पृथ्वीनारायण शाहले 'चार-वर्ण छत्तीस-जातको साझा फूलबारी' निर्माणसँग देश नेपालको राष्ट्रभाषाको आकार लिन पुगेको हो (हाम्रो राष्ट्रभाषा नेपाली, २०७०:१२)। यो उहिलेको कुरा भयो ।

वर्तमान नेपालको संविधान (२०७२) को प्रस्तावनामा नै 'नेपाल एक बहुभाषिक मुलुक हो' भनेर बहुभाषिकतालाई आत्मसाथ गरेको छ । संविधानमा गरिएको व्यवस्थाले 'नेपालमा बोलिने सबै मातृभाषा राष्ट्रभाषा हुन्' भन्ने व्यवस्था गरेको छ । त्यसै गरी (क) देवनागरी लिपिमा लेखिने नेपाली भाषा नेपालको सरकारी कामकाजको भाषा हुनेछ । भाषा सम्बन्धी अन्य कुरा भाषा आयोगको सिफारिसमा नेपाल सरकारले निर्णय गरे बमोजिम हुनेछ । संविधानतः भाषाको आधारमा कसैलाई विभेद नगरिने व्यवस्था समेत गरिएको छ । धारा (३२) मा 'प्रत्येक व्यक्ति र समुदायलाई आफ्नो भाषा प्रयोग गर्ने हक हुने' उल्लेख छ ।

हाम्रो निम्ति कुमा सागर जस्ता मातृभाषी गायक, गायिका, संगीतकारहरू आवश्यक छ । जसले हाम्रा लोक भजनहरू गाऊन् । लोकवाजाहरू प्रवर्द्धन गरुन् । लोकसंस्कृति, लोकसंगीतलाई पुस्तान्तरण गर्दै आएका बुढापाकाहरूको प्रेरणा लिएर युवा पुस्तामाझ लोकप्रिय बनिरहेका पुस्ता कुनै तुक्केदार कमेडियनहरू खिसिटिउरीको पात्र नबनुन् । कसैको मजाक पात्र नबनुन् । कुनै पनि गायक, संगीतकारले आफ्नो लोकपरम्परा, लोकसंस्कृति, लोकबाजा, लोकजीवनको संवाहक बनुन् । पहाडले मधेसको सम्मान, पूर्वले पश्चिमका समृद्धि, पश्चिमले पूर्वको मान खोज्नु पर्छ । कुनै पनि व्यक्ति जुन समुदायमा जन्मिएको हो, ऊ त्यही समुदायको प्रतिनिधित्व गर्छ । त्यसैले उसको भाषिक लवजलाई अबुझ, अज्ञानताको संज्ञा दिइनु हुन्न । र कसैलाई अपमान गरियो भने भाषिक मानवअधिकारको संरक्षण गर्न न्यायालय धाउनु पर्ने परिस्थिति आउनु हुन्न । यसतर्फ १४२ जातजातिका हरेक नागरिक समुदायमा प्रतिनिधिहरू सद्भाव बचाउनेतर्फ सजग हुनुपर्छ । जसले गर्दा 'हाम्रो मातृभाषाको अपमान अब हामी सहँदैनौं' उल्लेख गरिएको ब्यानर बोकेर सडकदेखि प्रशासन कार्यालय अगाडि प्रदर्शनमा उत्रन नपरोस् ।
इन्डिजियस

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# नेपालभाषाका चलचित्र उत्थानका लागि आयोजित "नेवाः फिल्म नेवाः फुड फेस्टिभल" सम्पन्न

काठमाडौं । ९७ औं ओस्कार अवार्ड समारोहमा २३ विधामा अस्कर विजेताको घोषणा गरिएको छ । फिल्म द ब्रुटालिस्टका लागि एड्रियन ब्रोडीले सर्वोत्कृष्ट अभिनेताको ओस्कार जिते भने फिल्म अनोराका लागि मिकी म्याडिसनले उत्कृष्ट अभिनेत्रीको अवार्ड जितिन् । यो वर्ष चलचित्र अनोराले उत्कृष्ट चलचित्र, उत्कृष्ट निर्देशन, उत्कृष्ट पटकथा, उत्कृष्ट सम्पादन, उत्कृष्ट अभिनेत्री विधामा सर्वाधिक ५ अवार्ड जितेको छ । दोस्रो स्थानमा रहेको चलचित्र द ब्रुटालिस्टले ३ अवार्ड हात पारेको छ ।

सीन बेकरद्वारा निर्देशित, रोमान्टिक कमेडी फिल्म अनोरा एक धनी व्यापारीसँग विवाह गर्ने यौनकर्मीको कथामा आधारित छ । फिल्मले कान्स फिल्म फेस्टिभलमा पाम डायर अवार्ड प्राप्त गरेको थियो । द ब्रुटालिस्टले ३ वटा गोल्डेन ग्लोब अवार्ड पाएका छन् । पिरियड ड्रामा फिल्म द ब्रुटालिस्टले यो वर्ष ३ ओस्कार अवार्ड जितेको छ । यसअघि यो फिल्मले ३ वटा गोल्डेन ग्लोब अवार्ड पनि जितेको छ । यो फिल्म एक हंगेरियन मानिसको कथा हो जो भागेर अमेरिका पुग्छ र आफ्नो सपनाको लागि संघर्ष गर्छ ।

त्यस्तै अमेरिकाको लस एन्जलसमा भइरहेको ओस्कर अवार्डमा जोई सलडानाले उत्कृष्ट सह-अभिनेत्रीको अवार्ड प्राप्त गरेकी छिन् । 'एमिलिया पेरेज'मा उत्कृष्ट अभिनय गरेबापत उनले यो पुरस्कार प्राप्त गरेकी हुन् । ओस्कर अवार्ड प्राप्त गरेपछि उनले भनिन्, 'म यो पुरस्कार प्राप्त गर्ने डोमिनिकन मूलको पहिलो अमेरिकी हुँ, मलाई थाहा छ म यो पुरस्कार प्राप्त गर्ने अन्तिम व्यक्ति हुनेछैन ।'

यस वर्ष आयोजना भइरहेको ९७ औं ओस्कार अवार्डमा फिल्म 'अनोरा' ले उत्कृष्ट सम्पादनको अवार्ड पनि जितेको छ । अहिलेसम्म पल टेजवेलले पोशाक डिजाइनको लागि ओस्कर पुरस्कार प्राप्त गरिसकेका छन् । यो श्रेणीमा कुनै अश्वेत व्यक्तिले ओस्कर पुरस्कार पाएको यो पहिलो पटक हो । यसैबीच, इरानी फिल्म निर्माताहरू हुसेन मोलेमी र शिरिन सोहानीले 'द स्याडो अफ द साइप्रस' को लागि एनिमेटेड छोटो फिल्मको श्रेणीमा ओस्कर पुरस्कार प्राप्त गरेका छन् । जबकि लाटभियन फिल्म फ्लोले उत्कृष्ट एनिमेसनको श्रेणीमा यो पुरस्कार प्राप्त गरेको छ । लाटभियन फिल्मले ओस्कार जितेको यो पहिलो पटक हो ।

# चलचित्र "नभ्य" को टीजर सार्वजनिक

लु:जः इन्टरटेनमेन्टको ब्यानरमा निर्माण भएको चलचित्र 'नभ्य' को टीजर सार्वजनिक भएको छ । लु:जः इन्टरटेनमेन्ट युट्युब च्यानलमार्फत उक्त चलचित्रको १:१६ मिनेटको टीजर सार्वजनिक भएको हो । लामो समयदेखि प्रतिक्षामा रहेको उक्त चलचित्रको टीजर हालै सार्वजनिक गरिएको हो ।

राम्रो चलचित्र बनाउन केही समय लागेको र आफ्नै केही व्यक्तिगत समस्याका कारण चलचित्र केही ढिला हुन गएको चलचित्रका निर्माता साथै निर्देशक लु:जः सिंहले बताए । 'राम्रो चलचित्र बनाउन केही बढि समय लिएको र यस बीच व्यक्तिगत समस्याहरुका कारण चलचित्र ढिला हुन गएको बताए । अब चाँडै प्रदर्शन गर्ने तयारीमा छु' निर्माता निर्देशक सिंहले भने ।

हाल सार्वजनिक भएको टीजर आब्सट्राक्ट किसिमको छ । आउँदो चैत्र १ गते चलचित्रको ट्रेलर सार्वजनिक गर्ने तयारीमा आफु रहेको सिंहले बताए । 'सामाजिक कथावस्तुमा आधारित चलचित्र हो । टीजर हेरेर चलचित्रको कथावस्तु बुझ्न गाह्रो होला । अब ट्रेलर आउँदैछ, त्यसबाट चलचित्रको कथावस्तु केही बुझ्न सकिएला' सिंहले थपे । नयाँ वर्षको अवसर पारेर चलचित्र पनि चाँडै नै रिलिज गर्ने तयारी भइरहेको जानकारी सिंहले दिए ।

चलचित्रमा आशिष्मा नकर्मी, प्रेक्षा अधिकारी, प्रशन्न गोपाली, विकास न्यौपाने, अभिनव अर्याल लगायतका कलाकारको मुख्य भूमिका रहेको छ । निर्माता निर्देशक सिंहको साथमा विप्लव पोखरेलले कथा लेखेका छन् । निर्देशन पनि सिंह र पोखरेलकै रहेको छ । सुमन कपालीले संगीत दिएको गीतहरुमा गायिका रीमा गुरुङ र संगीतकार कपालीकै स्वर रहेको छ । कान्तिपुर टेलिभिजनबाट प्रसारित चर्चित सिरियल 'कथा प्रेमका' र संगीता श्रेष्ठबाट निर्देशित चलचित्र 'कथा काठमाडौं' का छायाँकार लु:जः सिंहको निर्देशनमा बनेको यो चलचित्र अहिले धेरैको प्रतिक्षामा रहेको छ ।

# तेस्रो स्टार म्युजिक एण्ड फिल्मस अवार्ड २०८१ सम्पन्न

काठमाडौं । बिरिसु मिडियाद्वारा आयोजित 'तेस्रो स्टार म्युजिक एण्ड फिल्मस अवार्ड २०८१' सम्पन्न भएको छ । चलचित्र विकास बोर्डमा पूर्व उपराष्ट्रपति सम्माननिय परमानन्द झाको प्रमुख आतिथ्यतामा कार्यक्रम सम्पन्न भएको हो । अवार्ड कार्यक्रममा समाजमा विशिष्ट योगदान दिने व्यक्तिहरुलाई सम्मान पनि प्रदान गरिएको थियो । बिरिसु मिडियाका प्रबन्ध निर्देशक नरेन भट्टराईले स्वागत मन्तव्य राखेको कार्यक्रममा विशिष्ट अतिथिको रुपमा नेकपा समाजवादीका केन्द्रिय सदस्य सांगीता तामाङ, खानिखोला गाउँपालिका वडा नं ४ का वडाध्यक्ष निशान मोक्तान, मिलन थापा रहेका थिए । कार्यक्रममा नारी टेलिसिरियलका कलाकार टिमको विशेष उपस्थिति रहेको थियो ।

कार्यक्रमको प्रमुख अतिथिको रुपमा बोल्दै सम्माननिय परमानन्द झाले निजी संस्थाहरुले सम्मान र अवार्ड कार्यक्रम गरेर नयाँ पुस्ताका कलाकारलाई हौसला प्रदान गरेको र पुराना कलाकारहरुलाई सम्मान गरेकोमा खुशी व्यक्त गरे । उनले 'सरकारी तहबाट गर्न नसकेको काम निजी संस्थाले आँटेर गरेको छ । यो राम्रो कामको खुलेरै प्रशंसा गर्छु ।'

कार्यक्रममा उज्यालो नेटवर्कका कार्यकारी सम्पादक अनिश तामाङ 'राष्ट्रिय पत्रकारीता सम्मान', युरोपस्थित क्रोसियामा रहेका समाजसेवी दावा थिङलाई 'सर्वोत्कृष्ट समाजसेवी तथा युवा उद्यमी सम्मान' एनआरएनए माल्टाका अध्यक्ष एंव युवा नेता रेम्लाल खनाल (रेम्स) लाई 'राष्ट्रिय सेवा सम्मान' प्रदान गरिएको थियो । नृत्य निर्देशक संघ नेपाल युरोप शाखाका अध्यक्ष एंव नृत्य निर्देशक सुनिल गिरीलाई 'राष्ट्रिय नृत्य निर्देशक सम्मान' प्रदान गरिएको थियो । त्यसैगरी समाजसेवी एंव युवा नेता केशर बहादुर थापालाई 'विशिष्ट समाजसेवी सम्मान', अशिम लोप्चनलाई 'समाजसेवा र पत्रकारीता सम्मान', मेकअप आर्टिस्ट बिक्रम गौतमलाई 'विशिष्ट सेवा सम्मान', गोल्डेन पिक हाइस्कुलका प्रध्यानाध्यापक छत्रमणी राइलाई 'राष्ट्रिय शिक्षा सेवा सम्मान', विश्वकिर्तिमानी एंव कलाकार मनिश श्रेष्ठलाई 'राष्ट्रिय कला सम्मान', प्रशान्त घिसिङ तामाङलाई 'युवा व्यवसायी सम्मान' प्रदान गरिएको थियो । त्यसैगरी देवानन्द झालाई 'राष्ट्रिय पत्रकारीता समाजसेवा सम्मान' प्रदान गरिएको थियो । त्यसैगरी बुद्धिराम वि.क, दुर्गा बहादुर तामाङ, खिम बहादुर सुनार, नम बहादुर विश्वकर्मा, शंकर कुमार विष्टलाई 'राष्ट्रिय सेवा सम्मान' प्रदान गरिएको थियो ।

वरिष्ठ गायिका इन्दिरा गोलेलाई लाइफटाइम अचिभमेन्ट अवार्ड, सर्वोत्कृष्ट राष्ट्रिय गीत छिमी माम्बा, सर्वोत्कृष्ट चलचित्र अभिनेता शितल के.सी., सर्वोत्कृष्ट आधुनिक भावुक गीत गीतकार विष्णु मुरी, सर्वोत्कृष्ट चलचित्र अभिनेता (जुरी अवार्ड) बिरमान स्याङ्तान, सर्वोत्कृष्ट चलचित्र अभिनेता (पब्लिक चोइस अवार्ड) अर्जुन खड्का, सर्वोत्कृष्ट नेपाली लघु चलचित्र निर्देशक अमर ओली, सर्वोत्कृष्ट नेपाली चलचित्र खलनायक मिलन तामाङ, सर्वोत्कृष्ट तामाङ एकल गायक (पुरुष) जीवन बोम्जन तामाङ, सर्वोत्कृष्ट र्यापर कार्की जी (सुवास कार्की), सर्वोत्कृष्ट बाल गायक मन्जली तामाङ, सर्वोत्कृष्ट चलचित्र क्यारेक्टर कलाकार भुइसाल लामा, सर्वोत्कृष्ट आधुनिक गीत मोडल (पुरुष) (जुरी अवार्ड)- जीबी चिरन, सर्वोत्कृष्ट आधुनिक गीत गीतकार गोविन्द भट्ट, सर्वोत्कृष्ट कोरियोग्राफर सुरेन्द्र राई , सर्वोत्कृष्ट आधुनिक गीत मोडल (पुरुष) युविन ढुङ्गाना, सर्वोत्कृष्ट आधुनिक गीत डेब्यु मोडल (पुरुष) एलेक्स शर्मा, सर्वोत्कृष्ट बाल गायिका (जुरी अवार्ड) मेरिना जिम्बा, सर्वोत्कृष्ट आधुनिक गीत डेब्यु मोडल (पुरुष) जुरी पुरस्कार रमेश आर.डी, सर्वोत्कृष्ट आधुनिक गीत संगीतकार मन बहादुर बिस्वकर्मा, सर्वोत्कृष्ट पर्व गीत संयोजक राकेश सोनि, सर्वोत्कृष्ट आधुनिक गीत संगीत संयोजक (जुरी अवार्ड) सुजन भट्टराइ, सर्वोत्कृष्ट आधुनिक गीत संगीत संयोजक (पब्लिक चोइस अवार्ड) कर्साङ लामा, सर्वोत्कृष्ट आधुनिक गीत गायिका (बेस्ट अवार्ड) सुमी पराजुली, सर्वोत्कृष्ट आधुनिक गीत गायिका (ज्युरी पुरस्कार) एलिजा सिवाकोटी, सर्वोत्कृष्ट आधुनिक गीत गायिका (पब्लिक चोइस अवार्ड) पुजन काफ्ले, सर्वोत्कृष्ट आधुनिक गीत डेब्यु गायिका सबिता जैगडी, सर्वोत्कृष्ट आधुनिक गीत डेब्यु गायिका (जुरी अवार्ड) निशा घिमिरे, सर्वोत्कृष्ट आधुनिक गीत गायक (पुरुष) बेस्ट अवार्ड थुब्देन जी. दोर्जी, सर्वोत्कृष्ट आधुनिक गीत गायक (पुरुष) जुरी अवार्ड, सुजन सिवाकोटी , सर्वोत्कृष्ट तामाङ सेलो गीत संयोजक कुन्साङ दोर्जे लोप्चन, सर्वोत्कृष्ट नेपाली गीत संयोजक पुष्कर खत्री, सर्वोत्कृष्ट लोकदोहोरी गायिका (महिला) आशा लामा 'ज्ञानमाला' , सर्वोत्कृष्ट लोकदोहोरी गायिका (महिला) जुरी अवार्ड बिन्दु बी.सी., सर्वोत्कृष्ट लोकदोहोरी मोडल (महिला) शर्मिला डाँगी, सर्वोत्कृष्ट तामाङ चलचित्र सहयोगी अभिनेत्री मनिका सिङ्तान, सर्वोत्कृष्ट लोक पप गीतकार अशोक विष्ट, सर्वोत्कृष्ट आधुनिक गीत डेब्यु मोडल (महिला) सञ्जिता खतिवडा, सर्वोत्कृष्ट राष्ट्रिय गीत मोडल (पुरुष) दिपेश एस.के., सर्वोत्कृष्ट राष्ट्रिय गीत मोडल (महिला) रञ्जिता तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु मोडल (महिला), मनिशा तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु मोडल (प्रोत्साहन अवार्ड) हरिलाल तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो संगीतकार प्रताप सिंह जिम्बा, सर्वोत्कृष्ट तामाङ सेलो मोडल (पुरुष)पाल्देन लामा, सर्वोत्कृष्ट तामाङ सेलो मोडल (पुरुष) जुरी अवार्ड हिरा बहादुर मोक्तान, सर्वोत्कृष्ट तामाङ सेलो मौलिक गीत मोडल (पुरुष) प्रितम वाइबा, सर्वोत्कृष्ट तामाङ सेलो मौलिक गीत मोडल (महिला) छ्योइसाङ डोल्मा लामा, सर्वोत्कृष्ट तामाङ सेलो गायक (पुरुष) सञ्जीव घिसिङ , सर्वोत्कृष्ट तामाङ सेलो गायक (पुरुष) जुरी पुरस्कार कोशिश थोकर, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु गायिका काजल तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु गायिका (पब्लिक चोइस अवार्ड) इन्द्रेनी लोप्चान, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु गायिका (जुरी अवार्ड), सुस्मिता कटवाल, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु मोडल (महिला) बेस्ट अवार्ड सिर्जना घिसिङ, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु मोडल (महिला) जुरी अवार्ड म्हेन्दो घिसिङ, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु मोडल (पुरुष) दोर्जे लामा, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु मोडल (पुरुष) जुरी अवार्ड विजय तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो मौलिक गीतकार दोर्जे मोक्तान तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो गीतकार मङ्गले तामाङ, सर्वोत्कृष्ट लोकदोहोरी मोडल (पुरुष) मनिष तामाङ, सर्वोत्कृष्ट सिनेमेटोग्राफर प्रेम लामा, सर्वोत्कृष्ट खान्दोके सेलो गायक (पुरुष) मिलन योञ्जन, सर्वोत्कृष्ट लोकदोहोरी डेब्यु गायिका प्रेमा शेर्पा, सर्वोत्कृष्ट संगीत भिडियो सम्पादक मेघ बहादुर थापा, सर्वोत्कृष्ट आधुनिक गीत भिडियो निर्देशक विराज बस्कोटा, सर्वोत्कृष्ट संगीत भिडियो निर्देशक केशव कोइराला, सर्वोत्कृष्ट तामाङ चलचित्र डेब्यु अभिनेत्री तारा थोकर, सर्वोत्कृष्ट वेबसिरिज आर.के. गोम्बा, सर्वोत्कृष्ट वेबसिरिज निर्देशक टेकेन्द्र कार्की, सर्वोत्कृष्ट वेबसिरिज कलाकार पवन खतिवडा "बाबा" त्याग, सर्वोत्कृष्ट रेकर्डिस्ट किरण सिंह थापा, सर्वोत्कृष्ट लोकदोहोरी डेब्यु मोडल (पुरुष) सपन घतानी, सर्वोत्कृष्ट तामाङ सेलो डेब्यु गायक (पुरुष) सागर बोम्जन तामाङ, सर्वोत्कृष्ट तामाङ सेलो मौलिक गीत गायक (पुरुष) लोक बहादुर तामाङ, सर्वोत्कृष्ट तामाङ चलचित्र अभिनेता हुत्त बहादुर तामाङ, सर्वोत्कृष्ट म्हेन्दोमाया मोडल (महिला) बिमला तामाङ, सर्वोत्कृष्ट म्हेन्दोमाया मोडल (पुरुष) रमेश तामाङ, सर्वोत्कृष्ट राष्ट्रिय गीत संगीत भिडियो निर्देशक रोशन फ्युबा तामाङ, सर्वोत्कृष्ट हिमालयन मेलोडी मोडल (पुरुष) सोनाम तामाङ, सर्वोत्कृष्ट हिमालयन मेलोडी गायक कुंजाङ शेर्पा, सर्वोत्कृष्ट नृत्य गीत संयोजक जीवन बडु, सर्वोत्कृष्ट तामाङ सेलो गायिका (महिला) कमला डोङ, सर्वोत्कृष्ट अडियो मिक्सिङ वाङ्च्यु फ्यूबा तामाङ, सर्वोत्कृष्ट दशैं गीत गायक कृष्ण राज भण्डारीले अवार्ड प्राप्त गरेका छन ।

कार्यक्रममा त्रिशक्ती डान्स ग्रूपका कलाकार, मोडल म्हेन्दो घिसिङ र सिर्जना घिसिङले नृत्य प्रस्तुत गरेका थिए भने गायक कृष्ण राज भण्डारीले आफ्नो गीत प्रस्तुत गरेका थिए । कार्यक्रमको निर्णयक मनोज डंगोल, सिवन पोखरेल र मिन सागर लामा रहेका थिए । कार्यक्रममा सभापतित्व बिरिसु मिडिया प्रालिका अध्यक्ष विवेक लोप्चनले गरेका थिए ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

**THIMI TIMES WEEKLY**



Scan & Watch Yor Mobile

वर्ष १८ अङ्क २८ ने.सं. ११४५ चिल्लाथ्व त्रयोदशी फागुन २८ गते बुधबार, २०८१ 12 March 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/-

## राजावादीको गतिविधिविरुद्ध सत्ता र प्रतिपक्ष एक ठाउँमा



काठमाडौं । राजतन्त्रको अवसान भएको १७ वर्ष पछि देशमा आएको लोकतान्त्रिक गणतन्त्रात्मक राज्य व्यवस्थाले जनतामा नैराश्यताको अनुभूति गराएपछि अहिले आम जनमानसमा बर्तमान राजनीतिक दलहरु प्रति वितृष्णा जागेको छ । यस विषयमा राजनीतिक दलका नेता, कार्यकर्तालगायत सबै जानकार रहेको अवस्था छ । तर पनि देशमा राजनीतिक दलका नेताहरुले १७ वर्षसम्म पालै पालो राज्यसत्ताको उच्च शासन तहमा बसेर राज्यभोग गरे । तर राज्यको संरचनामा कुनै फेरबदल भएन । साथै विगतका राजाकालिन परम्पराहरु यथावत कायमै राखिएका छन् । विगतमा भिभिआइपीहरुको आगमनमा आम जनताले भोग्नु पर्ने सास्ती गणतन्त्रकालमा पनि कायमै रहेको छ । यस्तै हिजो सत्तामा बस्नेहरुबाट आज जनताले व्यहोर्नु पर्ने बेथितिहरु आज पनि कायमै रहेको अनुभूति आमजनमासमा छ । अझ विगतमा भन्दा बेथिति, विकृति, भ्रष्टाचारलगायतमा राज्यपक्षबाट नीतिगत बेथितिहरुले उब्जाएको कारक तत्वकै कारण पूर्वराजा ज्ञानेन्द्र शाहले गत फागुन ७ गते प्रजातन्त्र दिवसको अवसार पारेर दिएको सन्देशले राजावादीहरु उत्साहित बनेको थियो । जसको कारण सोमबार उनलाई पाखराबाट काठमाडौं आउने क्रममा त्रिभुवन विमानस्थलमा स्वागत गर्दै र्‍यालीसहित ज्ञानेन्द्रलाई निर्मलनिवास लैजाने कार्यक्रम तय गरेका थिए ।

अहिले गणतन्त्र पक्षधर राजनीतक दलहरु प्रति जनतामा देखिएको असन्तोषका कारण एकाएक राजतन्त्रको पक्षमा माहोल बनेको देखाउन राजावादी दल राष्ट्रिय प्रजातन्त्र पार्टी (राप्रपा) कम्मर कसेर लागेको छ । अन्य दलको साथ नभए पनि उग्रराष्ट्रवादको एजेण्डा लिएर अभियान थालेका दुर्गा प्रसाईंको टीम पनि यसमा लागेको छ । यस्तोमा प्रमुख दलका नेताले भने आपत्ति जनाएका छन् ।

नेकपा एमाले अध्यक्ष तथा प्रधानमन्त्री केपी शर्मा ओली, नेपाली कांग्रेसका सभापति शेरबहादुर देउवादेखि प्रमुख प्रतिपक्षी दलका नेता एवं नेकपा (माओवादी केन्द्र)का अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'समेतले आपत्ति जनाएका हुन् । गणतन्त्र, संघीयता, समावेशिताजस्ता परिवर्तनका मुद्दामा आँखा लगाए पूर्वराजाको सुविधा खोस्नेसम्मको चेतावनी दलका नेताहरूले दिइरहेका छन् ।

देशमा गणतन्त्रवादीविरुद्ध राजतन्त्रवादीहरू सक्रिय भइरहेका बेला पछिल्लो चुनावबाट उदाएको चौथो ठूलो दल राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा) भने मौन छ । रास्वपा आफ्नो अध्यक्ष रवि लामिछाने विरुद्ध वर्तमान सत्तारुढ दलहरुबाट अनावश्यक रुपमा कानुनी झमेलामा फसाउने कार्य गरेको तर आफ्नै दलका कार्यकर्ताहरुको लागि भने उदार रहेकोले पनि लोकप्रियताकै नाराका आधारमा उदाएको कान्छो दल रास्वपा तत्काल कतै पनि नखुलेको हुनसक्छ । रास्वपाका कार्यबाहक प्रवक्ता मनिष झा परम्परागत दलले नागरिकलाई डेलिभरी दिन नसकेको 'फ्रस्टेसनको एजेण्डा'लाई राजावादीले बोकेको बताउँछन् ।

'८ महिनामा शक्तिशाली सरकार भनिएको दुई ठूला दलहरुको सरकारले रवि लामिछाने, बालेन साह, कुलमान घिसिङलाई तह लगाउने, स्टेडियममा मान्छे कुट्नेसम्मका काम भए । नागरिकलाई डेलिभरी दिने काम भएनन्,' झाले भने, 'दुईतिहाइको दम्भ मात्रै भयो । सबैतिर फ्रस्ट्रेसन देखिएको छ । फ्रस्ट्रेसन सेतो कागज होइन, केही एजेण्डा लिएर कोही आउँछन् । यो एजेण्डामा राजावादी आए । रास्वपाले यसरी नै बुझेका छ ।' पूर्वराजाको पक्षमा प्रदर्शन गर्न पाइने भए पनि आफूहरू अहिलेको व्यवस्थाविरोधी नभएको झा बताउँछन् ।

'पूर्वराजाको समर्थक हुन पाइन्छ । पूर्वराजालाई नेता मान्न पाइन्छ । राजाले हजारौं, लाखौं र करोडौं मान्छे सडकमा उतार्न सक्छन् । तर, यो सबै संविधान र कानूनको परिधिभित्र रहेर हुनुपर्छ । राजेन्द्र लिङ्देन र कमल थापाहरूले मिलेर निर्वाचनमा दुईतिहाइ ल्याउने र संविधान संशोधन गर्ने क्षमता हासिल गरेर देखाए हुन्छ,' झाले भने, 'तर, रास्वपा संविधान,

**बाँकी पेज ७ मा**

## भक्तपुरमा मनाइने अनौठो होली पर्व सुरु



भक्तपुर । काठमाडौंको बसन्तपुर दरवार परिसरमा रङ्गीचङ्गी कपडा सहितको ध्वजा छत्र आकारको लिङ्गो ठड्याएपछि उपत्यका जसलाई नेपालभाषामा नेपाल मन्दल पनि भनिन्छ । यहाँ रङ्गको पर्व होली शुरु भएको मानिन्छ । तर नेपालकै सानो जिल्लाको रुपमा रहेको भक्तपुरमा भने होलीको शुरुआत अनौठो रुपमा गरिने प्रचलन रहेको छ ।

**बाँकी पेज ७ मा**

## एकसय चिनियाँ फोटोग्राफर काठमाडौंमा !



काठमाडौं । नेपालको कला, संस्कृति, सम्पदा र पर्यटनको दृश्याङ्कनका लागि चिनियाँ 'फोटोग्राफर'को एक सय सदस्यीय टोली नेपाल भ्रमणमा आएको छ । चाइना-नेपाल फ्रेन्डसीप फोरम, नेपाल पर्यटन बोर्ड र राष्ट्रिय फोटो पत्रकार समूहको संयुक्त आयोजनामा हुने 'लेन्स अन नेपाल १०० चिनियाँ फोटोग्राफरद्वारा नेपालको कला, संस्कृति, सम्पदा र पर्यटनको दृश्याङ्कन' कार्यक्रमअन्तर्गत उक्त टोली सोमबार नेपाल आएको हो । नेपाल भ्रमणमा आएका चिनियाँ फोटोग्राफरको टोलीलाई स्वागत गरिएको छ ।

टोलीलाई सांसद उर्मिला माझी, नेपाल पर्यटन बोर्डका

**बाँकी पेज ७ मा**

## संविधानमा "समाजवाद उन्मुख" लेखेर समाजवाद नआउने प्राध्यापकहरुको जिकिर



काठमाडौं । नेपालमा सामन्तवाद बिरोधी पूजीवादी जनवादी क्रान्ति सम्पन्न भैनसकेको त्रिभुवन विश्वविद्यालयका प्राध्यापक डाक्टर जगदीशचन्द्र भण्डारीको भनाइ छ । त्यसैले, संविधानमा समाजवाद उन्मुख लेख्दैमा समाजवाद नआउने उनले जिकिर समेत गरे ।

अर्थ राजनीतिका बिश्लेषक तथा लेखक डीपी ढकालको पुस्तक 'समाजवादी क्रान्तिका दुई चरण'बारे त्रिभुवन विश्वविद्यालय परिसरमा बिहीवार आयोजित परिचर्चा कार्यक्रमलाई सम्बोधन गर्दै प्राडा भण्डारीले भने, "देश समाजवादतर्फ हुन्थ्यो भने सर्वहारा वर्गको नेतृत्वमा जनवादी अधिनायकत्वको अवस्था हुन्थ्यो र मिसन ८४ भन्दै कम्युनिष्टहरु रुँदै कराउँदै हिड्नुपर्ने अवस्था हुदैनथ्यो ।"

प्राडा जगदीशचन्द्र भण्डारी

समाजवादी क्रान्तिसँग जोडिएका अनुभव र आफ्नो बैचारिक दार्शनिकीकरण मार्फत लेखक ढकालले समाजवादी क्रान्तिका लागि गुन लगाएका भएपनि मार्क्सवादमा समाजवादी क्रान्तिका दुई चरण भनेर व्याख्या नगरिएको उनले बताए । समाजवादको चरण नहुने भन्दै उनले सिधै जनवादी अधिनायकत्व र सर्वहारा अधिनायकत्वमा जोड दिए ।

कार्यक्रममा त्रिविका सह प्राध्यापक डा रमेश पौडेलले समाजवादी राजनीतिक अर्थशास्त्रमा समाजवादी क्रान्तिका दुई चरण पुस्तकले बहस छेडेको बताए ।

डा रमेश पौडेल

समाजवादी नेताहरुको बिचार र व्यवहारले समाजवादी आन्दोलनमा समस्या देखिएको र नेताहरु सामुहिक सिद्धान्तले निर्देशित नभई व्यक्तिगत बिचारले निर्देशित हुँदा आन्दोलनको भविष्य व्यक्तिकेन्द्रित हुन पुगेको उनले खुलासा गरे ।

सिद्धान्तलाई सत्तामा पुगेपछि बिर्सने र कार्यान्वयन नगर्ने अवस्थाले समाजवादमा पुग्ने अवस्था नहुने उनले स्पष्ट पारे ।

राज्यले उत्पादनमा लगानी नगर्दा नेपाली रैथाने बस्तु तथा सेवा बिस्थापित हुन पुगेका र यसले समाजवादलाई असर पुर्याएको उनले दावी गरे । उनले सर्वहारा वर्गको अधिनायकत्व शब्दावलीमै समस्या रहेको र त्यसलाई फरक ढंगले परिभाषित

**बाँकी पेज ७ मा**

## थोत्रो राजतन्त्र किन ?

● कुमार लघु ,ख्वप

२०३६ सालमा मै राजा फाल्न आन्दोलन थालेको हामीलाई थाहा थियो । यसैको क्रममा बहुदल छान्ने कि निर्दल छान्ने भनेर राजाको तर्फवाट व्यवस्था छान्ने जनतालाई मौका आयो । सत्ताधारीहरूले पासा फाले । जनताले संघर्ष गरेर आएको चुनावमा आफ्नो अधिकार उपयोग गरे । सत्ताधारीहरूले चुनावमा झेलि गरेर निर्दललाई बहुमत आएको दावा गरि निर्दललाई कायम गरे । त्यति वेला पंञ्चायत व्यवस्था थाम्यो । राजा त्यतिवेला पनि थामेको थियो । फेरि ०४६/४७ सालमा बलियो आन्दोलन गरे । आन्दोलनले जनताको बलले राजावादीहरू पासाको गोटी फेरि फाले बहुदलको घोषणा गरेर नेता कार्यकर्ता र जनतालाई छल्यो । राज्यसत्ता राजाकै हातमा रहयो । जनतालाई दमन शोषण देशको कुनाकुनामा कायम नै थियो । दलहरू दल खोलेर आ-आफ्नो स्वार्थमा लाग्यो । चुनाववाट दलहरूले बहुमत ल्याएर संसद कव्जा गरे । जनतालाई लोपा ख्वाउँदै वर्तमानको गठवन्धनको दलले पालो पालो गर्दै शासन सत्तामा हाली मुहाली गरी रमायो । सत्तामा झुण्डिएर आ-आफ्ना स्वार्थ पूर्ति गरिरह्यो । यो मैले सरर्सर्ति जानकारी मात्र गरेको छु। तथ्यगत तिथीमितीहरू अलि गहिरिएर लेख्नु पर्ने हो । हालको समय र परिस्थितीसम्ममा आउनलाई धेरै क्रान्तिकारी जनताको छोरछोरीको ज्यानको बलिदानको कुरो गरेर साध्य छैन् । धेरैको जीवन लिला समाप्त पा-र्यो । जेलनेल नेता कार्यकर्ता र समर्थकको समय बर्वाद प-र्यो । पंचायत सरकारले अकालमा ज्यानलियो । सान वेलैमा उद्देश्य राख्ने हो । राजा सामान्तवर्गवाट आएको हुन्छ । जनतालाई मिठो र चिलो शव्दले घसेको हुन्छ । राजाहरू जनताको निम्ति चिप्लो शव्दले घसेर जनतालाई माया गरेको कुरामा सोझो जनता विश्वास गर्छन् । राजा र राज्यसत्ताले कहिले जनताको निम्ति बोलको कुरा पूरा भएको छैन् । खाली आश्वासनमै अडाएको हुन्छ । वर्तमानमा राजाको आवश्यकता छैन् । राजा र राजपरिवारको कदमको समय ०४७, ०६२/०६३ सालमै समाप्त भएको जनतालाई थाहा छ । अब दलले नै जनताको नेतृत्व गरेको छ । दलले सक्रिय भूमिका निभाउन नसकेकोले मात्र जनता रिसाएर पुरानै कपडा लाउँछु भनेर

**बाँकी पेज ७ मा**

# भिजिट भिसाको आवरणमा महिला तस्करी



काठमाडौं । भिजिट भिसाको आवरणमा सुरक्षाकर्मी, अध्यागमन र नेपाल एयरलाइन्सका कर्मचारीको मिलेमतोमै मानव तस्करी हुने गरेको विषय खुलेको छ । काठमाडौं उपत्यका अपराध अनुसन्धान कार्यालयको अनुसन्धानमा यस्तो देखिएको प्रहरी स्रोतको दावी छ भिजिट भिसामा हुने मानव तस्करी नरोकिएपछि प्रहरी प्रधान कार्यालयले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा मानव बेचबिखन तथा अनुसन्धान ब्युरो नै खटाए पनि त्यसलाई पुर्ण रुपमा नियन्त्रण गर्न नसकिएको स्वयम प्रहरी बताउछ । विमानस्थलबाट भिजिट भिसामा दुबईमा मात्रै दैनिक २५० जनाभन्दा धेरै मानव तस्करी हुन थालेपछि ब्युरोले डेढ वर्षअघिबाटै टोली परिचालन गरे पनि अध्यागमन कर्मचारीले विरोध गरेपछि फिर्ता भएको थियो । तर, पछि अनुसन्धानमा खटिएको प्रहरीले अध्यागमनकै कर्मचारीको मिलेमतोमा भिजिट भिसामा मानव तस्करी हुने गरेको फेला पारेपछि पुनः ब्युरोको टोली परिचालन गरिएको थियो ।

त्रिभुवन अन्तराष्ट्रिय विमाल स्थलबाट ओमन हुदैं कुवेत, दुवई , साउदी अरविया, कतार, सिरिया, इराक, बहराइनमा नेपाली महिलाहरुको तस्करीको क्रम निरन्तर बढी रहेको छ ।

दुवई सरकारले भिजिट भिषामा कडाई गरेपछि नेपालका विभिन्न ट्राभल एजेन्सीहरुले ओमनलाई ट्रान्जिट प्वाइट बनाएर मानव तस्करी गर्ने गरेको प्रहरीले बताएको छ । नेपालका विभिन्न एलाइन्स कम्पनीहरुको संलग्नतामा मानव तस्करी गर्ने गरिएको छ । कुवेत एयरवेट र जजिरा एयरवेजमा विशेष गरि मानव तस्कर हुने गरेको पाइएको छ ।

काठमाण्डौंबाट कुवेत, कुवेतबाट कतारको टिकट जारी भए पनि विचमा कुवेत ट्रान्जिट भएकाले ति महिलाहरु कुवेत मै वाहिर निस्कने गरेका छन । यसमा एयरलाइन्सको मिलेमतोमा मानव तस्करी हुने स्रोतको दावी छ । २०७३ सालबाट खाडी मुलुकमा महिलालाई घरेलु कामदारको रुपमा जान सरकारले रोके पनि दिन प्रतिदिन महिलाहरु खाडी मुलुकमा दैनिक जसो विभिन्न माध्यमबाट गैर कानुनी रुपमा तस्करीको शिकार भैरहेका छन । विशेष गरेर ग्रामीण क्षेत्रका महिला एवम किशोरीहरुलाई रोजगारीको प्रलोभनमा तस्करी गर्ने गरिएको छ ।

सरकारले भिजिट भिषामा जानको लागि ६ बुद्धे मापदण्डलाई आधार बनाएर काठमाण्डौंका विभिन्न ट्राभल एजेन्सीले महिलाहरुलाई खाडी मुलुकमा पुऱ्याइरहेका छन । सरकारले जारी गरेको ६ बुदे मापदण्ड २०८० माघ १० गते देखि लागु हुने गरि भिजिट भिषा तथा पर्यटक भिषामा विदेश यात्रामा आवश्यक कागजपत्रहरु विवरण तोकेको भएपनि त्यसलाई नै नक्कली बनाउने गरिएको छ ।

प्रहरी स्रोतका अनुसार दुबईमा मात्रै कम्तीमा दैनिक २५० महिलाको तस्करी हुन्छ । जसका लागि प्रयोग हुने भिजिट भिसा हो । पहिला भिजिट भिसामा दुबई जानका लागि प्रहरी रिपोर्ट, १२ कक्षा पास गरेको शैक्षिक प्रमाणपत्र, बैंक स्टेटमेन्ट अनिवार्य गरिएको थियो । तस्कर समूहले यस्ता कागजात नक्कली बनाएर पठाउने गरेको थियो । जसमा अध्यागमनका कर्मचारीसँग पनि सेटिङ मिलाउनुपर्थ्यो । अहिले भिजिट भिसामा जान चाहनेका लागि होटेल बुकिङ, जहाजको टिकट र भिसा भए पुग्छ । जसमा विगतमा जस्तो धेरै खर्च पनि नलाग्ने भएकाले तस्करी थप सहज भएको छ । तस्करले सहजतामा खेलेर मानव तस्करी गरिरहेका छन् ।

नेपाल सरकारले २०८० माघ १० देखि लागु हुने गरि गरिएको भिजिट भिषाको कार्यविधिमा टेकेर विभिन्न दलाल, ट्राभल एजेन्सीले मानव तस्करी गर्नको लागि नेपाली महिलालाई खाडी मुलुकमा अबैधानिक रुपमा पठाइरहेको छ । यस ६ बुद्धे मापदण्डमा दुईतर्फी हवाई टिकट नक्कली हुने गरेको तथ्य फेला परेको छ । यसमा त्रिभुवन अन्तराष्ट्रिय विमानस्थलका एयरलाइन्सका कर्मचारीहरु प्रत्यक्ष रुपमा विभिन्न ट्राभल एजेन्सीका सञ्चालक, मानव तस्कर गर्न सघाउने दलालसँग प्रत्यक्ष संलग्नता भई एकतर्फी मात्र हवाई टिकटमा बोडिङ पास जारी गरि महिलाहरु पठाउन संलग्न भएको र विभिन्न टार्भल एजेन्सीका सञ्चालकसँग एकजना महिला पठाउन एयरलाइन्सका कर्मचारीले १० हजार सम्म रकम असुल्ने गरेको यसमा दुईतर्फी टिकटमा एकतर्फी टिकटमा बोडिङ पास जारी गरिने र रिटन टिकट नक्कली बनाउने गरिएको पाइएको छ ।

मापदण्डमा अनिवार्य रुपमा ५०० डलर हुने भनिएता पनि ५०० अमेरिकी डलर विना नै एयरलाइन्सका कर्मचारीले विना डलर महिलाहरुलाई बोडिङ पास जारी गरिने गरिएको छ । यसमा प्रत्यक्ष रुपमा एयरलाइन्सका कर्मचारीको संलग्नता भएको हुनसक्ने आशंकाहरु प्रशस्तै रहेका छन । भिजिट भिषामा भ्रमण अवधिभर होटल बुकिङ गरेको प्रमाण वा होटल बुकिङ नभई आफन्तसँग रहने भएका एकाघरका तिन पुस्ते नाता खुल्ने सम्पुर्ण प्रमाणहरु नक्कली हुने होटल बुकिङ विभिन्न अनलाईनबाट नक्कली बनाउने गरिएको छ । यी सबै मापदण्डलाई टेकेर भिजिट भिषामा दैनिक जसो २०० जना महिलाहरुको मानव तस्कर हुने गरिएको छ । यसमा अध्यागमन विभाग, गृह मन्त्रालय, विभिन्न एयरलाइन्सका कर्मचारी सबैको संलग्न भएको आशंका गर्ने ठाउँ रहेका छन जसलाई नियन्त्रण गर्ने दायित्व गृह मन्त्रालयको छ ।

भिजिट भिषामा सरकारले लचिलो मापदण्ड बनाएर नेपाली महिलालाई घरेलु कामदारमा पठाइरहेको कारण नेपालीहरुले प्रत्यक्ष तथा अप्रत्यक्ष रुपमा विभिन्न समस्या भोग्नुपरेको छ । श्रम स्विकृति लिएर पठाउनु पर्नेमा भिजिट भिषामा पठाएकोले ति महिला कति गए, कहाँ गए, के गर्दै छन भन्ने यकिन तथ्याङक सरकारी निकायसँग नहुने भएकाले यो भिजिट भिषालाई कडाई गरि जान चाहने इच्छुक महिलालाई श्रम स्विकृती प्रद्धान गरि खाडी मुलुकमा महिलालाई घरेलु कामदारमा पठाउदा सरकारसँग एकिन तथ्याङक हुने भएकाले सो बमोजिम गर्न जरुरी छ ।

खाडीमा २०७३ देखि हाल सम्म २ लाख नेपाली महिला घरेलु कामदारमा अवैधानिक रुपमा गएको पाइएको छ । अबैधानिक रुपमा ति महिलाहरु जादाँ सरकारसँग यकिन तथ्याङकसमेत छैन । ती महिलाको विभिन्न तरिकाले शारिरिक, यौन तथा श्रम श्रोषण भोग्नु परेको छ । यसमा गृह, श्रम मन्त्रालयको ध्यान जान जरुरी छ ।

नेपालको त्रिभुवन अन्तराष्टिय विमानस्थल प्रयोग गरि नेपाली महिलाहरु पहिलो चरणमा नेपालबाट भिजिट भिषामा बाहिर जान्छन । त्यसपछि एयरपोटबाट ओमन, कतार, संयुक्त अरव इमिरेट निस्किएपछि तिनीहरुले घरेलु कामदारको भिषा प्राप्त गर्दछन अनि ओमन इराक, दुवई कुवेत जाने र घरको काममा लगाउने गरेका छन । एजेन्टहरुले तिनीहरुलाई भिजिट भिषाको नाममा बेचिरहेका छन । यस प्रक्रियामा नेपालका एयरपोर्टका कर्मचारीलाई प्रति व्याक्ति ४० देखि ५० हजार रुपैया सम्म अनाधिकृत रुपमा रकम दिइन्छ । यसले समग्र गतिविधि अपराधिक र गैर कानुनी रुपमा काम गर्न सहयोग गर्दछ । नेपाल सरकारद्धारा २०७३ बाट घरेलु कामदारमा खाडीमा पठाउन रोकिए पनि यस्तो प्रकारको मानव तस्करहरुले यी क्रियाकलापलाई दिनहु १५० देखि २०० जनाको हाराहारीमा पठाउने गरेका छन । यस्तो क्रियाकलाप रोकथामको लागी अझै प्रभावकारी कदम चालेको देखिन्न ।

यसले नेपाली महिलाहरुको सुरक्षा, सम्मान र नेपालको कानुनको खिल्ली उठाएको बुझिन्छ । यसमा नेपाल सरकार र सम्मानिय प्रधानमन्त्रीको ध्यान जान जरुरी छ । यसरी महिलाहरु तस्करी हुदाँ नेपालको कुटनितिक सम्बन्धमासमेत खलल पुऱ्याउने छ साथै नेपाल प्रति बाहिरी देशले हेर्न दृष्टिकोणमा दरार आउने छ । साथै नेपाली पासपोर्टलाई समेत असर पर्ने देखिन्छ । भिजिट भिषामा मानव तस्करीमा सधाउने काठमाण्डौं उपत्यकाका टाभल एजेन्सीहरुका सञ्चालकलाई छानविन गरि कानुनी कारवाही गर्ने गरि कानुनी दायरामा ल्याउने वातावरण सरकारी संयन्त्रबाट कार्यविधि नै बनाएर गर्न जरुरी छ । नेपालमा मानव बेचविखन व्युरो भएपनि व्युरोको कामकाजमासमेत उल्लेखिय भुमिका प्राप्त गर्न नसकेको आभास श्रमिकहरुले गरेका छन ।

# होली गार्डेन स्कुलको ४२ औं वार्षिकोत्सव सम्पन्न




भक्तपुर । मध्यपुर थिमि नगरपालिका वडा नं. ६ बाहाखाबजारस्थित होली गार्डेन इग्लिंस सेकेण्डरी स्कुलले आफ्नो ४२ औं वार्षिकोत्सव सम्पन्न गरेको छ । विद्यालय व्यवस्थापन समितिका अध्यक्ष नरगोविन्द शंखदेवको सभापतित्वमा आयोजित कार्यक्रमको उद्घाटन मध्यपुर थिमि नपा ६ का वडाध्यक्ष ज्ञानदास प्रजापतिबाट भएको थियो ।

विद्यालयका प्रधानाध्यापक रत्नमान शंखदेवले विद्यालयको वार्षिक प्रगति विवरण पेश गर्दै समयसापेक्ष प्राविधिक शिक्षा प्रदान गर्न स्कुलले डिजिटल बोर्डका माध्यमबाट अध्यापन गराउनुका साथै गणित प्रयोगशालामार्फत गणित अध्यापन गराउँदै आएको जानकारी दिए । कार्यक्रमका सभापति नरगोविन्द शंखदेवले शिक्षाको गुणात्मक विकास, विस्तार र व्यवहारिक शिक्षाको लागि शिक्षाकर्मी, बुद्धिजिवि, जनप्रतिनिधि सबैको साथ र सहयोगका साथ अघि बढिरहेको जानकारी दिए ।

कक्षा एसकेजीको अध्ययन पुरा गरेका विद्यार्थीहरुलाई दीक्षित गरिएको उक्त कार्यक्रममा नर्सरीदेखि ९ सम्म अध्ययनरत विद्यार्थीहरुले गीत, नृत्य, कविता, खेल प्रदर्शन मार्फत आफ्नो प्रतिभा प्रदर्शन गरेका थिए । कार्यक्रममा गतवर्षको एसईई परीक्षामा सफल भएका विद्यार्थीहरुलाई सम्मान गरिएको थियो ।

त्यसैगरी विद्यालयमा दुईदशक भन्दा लामो समयदेखि निरन्तर अध्यापनरत शिक्षक रामप्रसाद न्यौपानेलाई चाँदीको सिक्का सहित दिर्घसेवा सम्मान प्रदान गरिएको कार्यक्रम शिक्षिका मेनका श्रेष्ठले संचालन गरेको थियो ।

# विनायकमा चौथो एसक्युसी स्कुल कन्भेन्सन



भक्तपुर । समय सापेक्ष पाठ्यक्रम अनुसार पठनपाठन गराउँदै आएको विनायक शिक्षा निकेतनले यही २०८१ फागुन २३ गते चौथो Student Quality circle स्कुल कन्भेन्सनको आयोजना गरेको छ । विद्यालयका प्रिन्सिपल सुरेन्द्र विक्रम प्रजापतिको अध्यक्षतामा सम्पन्न उक्त कार्यक्रम मास्टर ट्रेनर तथा मध्यपुर हब कोअर्डिनेटर प्रेमप्रसाद निरौला, मास्टर ट्रेनरहरू उत्तरकुमार सुब्बा र तुल्सीहरी प्रजापतिको आतिथ्यतामा सम्पन्न भएको थियो ।

कक्षा ४ देखि ९ सम्मका १२ वटा सर्कल सहभागी रहेको उक्त कन्भेन्सनको मुख्य उद्देश्य विद्यार्थीहरूलाई हरेक समस्या समूहमा पहिचान गरी त्यसको समाधान आफै कसरी गर्न सकिन्छ र त्यसका लागि के कस्ता टुल्स र विधिहरु प्रयोग गर्न सकिन्छ। कसरी विद्यार्थीलाई असल र स्मार्ट बनाउने भन्ने रहेको सहायक प्रिन्सिपल निरौलाले जानकारी दिए । र्यक्रमको समापन समारोहमा बोल्दै विद्यालयका संस्थापक प्रिन्सिपल प्रजापतिले विद्यार्थीहरूको सर्वाङ्गिण विकास, वाकपटुताको विकास तथा असल ,चरित्रवान, दक्ष र नेतृत्व क्षमता वृद्धि गर्न तथा हरेक क्रियाकलाप समूहमा गर्न सिकाउने उद्देश्य राखी विगत ६ वर्षदेखि कोर्सकै रुपमा एक्सक्युसीलाई पठनपाठन गराउँदै आएको र जसले विद्यार्थीहरुलाई पढाइका साथै अन्य क्षेत्रमा सफल बनाउन प्रयत्नरत रहेको कुरा बताए ।

# हिमाल एकेडेमीको २१ औं वार्षिकोत्सव सम्पन्न




भक्तपुर । हिमाल एकेडेमी स्कुलले आफ्नो २१ औं वार्षिकोत्सव तथा सम्मान कार्यक्रम-२०८१ सम्पन्न गरेको छ । बागमति प्रदेश सरकारका स्वास्थ्य मन्त्री किरण थापाको प्रमुख आतिथ्यमा कार्यक्रम सम्पन्न भएको हो ।

कार्यक्रममा बोल्दै मन्त्री थापाले बागमति प्रदेशका जनतालाई स्वास्थ्य सेवाको स्तरोन्नति गर्न आफू प्रतिबद्ध रहेको जिकिर गर्दै २०८० सालको एसईईमा ४ जिपिए ल्याउन सफल विद्यालयका विद्यार्थी विपिना मिश्रलाई सम्मान पत्र प्रदान गरेका थिए । साथै मिश्रलाई स्कुलका प्रमुख प्रदिप थापाले पच्चीस हजार नगद पुरस्कारसमेत प्रदान गरे ।

वार्षिकोत्सव कार्यक्रममा विद्यालयका विद्यार्थीहरुले आ-आफ्नो प्रतिभा प्रस्तुत गरेका थिए । कार्यक्रममा बोल्दै भक्तपुर जिल्ला समन्वय समितिका प्रमुख ईश्वर थापाले विद्यार्थीलाई शैक्षिक ज्ञानका साथै सीपका लागि समेत जोड दिनुपर्ने बताए । कार्यक्रममा प्याव्सन भक्तपुरका अध्यक्ष राजन कस्पाल, समाजसेवी मदन घिमिरे, कान्तिपुर पत्रिकाका सहायक सम्पादक राजेन्द्र बस्नेत, नेपाल पुस्तक व्यवसायी संघ भक्तपुरका उपाध्यक्ष महेश थापा लगायतको उपस्थिति रहेको थियो ।

सोही अवसरमा विद्यालयको प्रगति र भावी योजनाबारे स्कुलका प्रिन्सिपल प्रदीप थापाले २०७२ को भूकम्प र २०७७/२०७८ को कोभिड-१९ को जटिल परिस्थितिमा अभिभावकहरूको सहयोगको उच्च कदर गरे । विद्यालय व्यवस्थापन समितिका अध्यक्ष श्यामकृष्ण थापाको अध्यक्षतामा सम्पन्न कार्यक्रमका एसईई व्याच २०७६ देखि २०८० सम्मका १४६ विद्यार्थीहरुलाई सम्मान र मायाको चिनो प्रदान गरिएको विद्यालयकी संयोजक प्रतिक्षा केसी थापाले जानकारी दिइन् ।

# पब्जीको नयाँ ३.७ अपडेट, नयाँ सुविधाका साथ खेल्न सकिने




एजेन्सी । युवाहरु माझ लोकप्रिय मोवाइल गेमको रुपमा रहेको पब्जी अर्थात् प्लेयर अननोन ब्याटलग्राउन्ड मोबाइलको क्रेज ३.७ अपडेट प्राप्त भएपछि अझ बढ्नेछ । पब्जी खेलाडीहरू नयाँ अपडेटको उत्सुकताका साथ पर्खिरहेका छन् र आशा गरिरहेका छन् कि उनीहरूको पर्खाइ मार्च ७ मा समाप्त हुनेछ ।

ब्याटल रोयाल खेलको अपडेट विश्वव्यापी रूपमा रोल आउट हुने अपेक्षा गरिएको छ । यो नयाँ अपडेटसँगै, पब्जी प्लेयरहरूले धेरै नयाँ सामग्री र सुविधाहरू प्राप्त गर्नेछन् । नयाँ संस्करणले पूर्ण रूपमा नयाँ गोल्डेन डाइनेस्टी थिम मोड, गेमप्ले एन्हान्समेन्ट, बग फिक्स र अन्य चीजहरूका साथै अतिरिक्त नक्सा पनि ल्याउँनेछ ।

यो अपडेट आएपछि, खेलाडीहरूले यसलाई गुगल प्ले स्टोर, एप स्टोर र अन्य धेरै प्लेटफर्महरूबाट डाउनलोड गर्न सक्छन् । यद्यपि पब्जी मोबाइल ३.७ अपडेटको लागि रोलआउट मार्च ७ बाट सुरु हुनेछ, तर यसको विभिन्न प्लेटफर्म र क्षेत्रहरूमा चरणबद्ध रिलीजहरू हुनेछन् । अघिल्लो अपडेट जस्तै, एन्ड्रोइड प्रयोगकर्ताहरूले पहिले अपडेट पाउने अपेक्षा गरिएको छ, जबकि आईओएस प्रयोगकर्ताहरूले केही समय पछि सुविधा पाउनेछन् ।

पब्जी मोबाइल ३.७ अपडेट: नयाँ अपडेट कसरी डाउनलोड गर्ने इच्छुक खेलाडीहरूले गुगल प्ले स्टोर, एप स्टोर, हुवावे एप ग्यालरी, सामसुङ ग्यालेक्सी स्टोर र आधिकारिक पब्जी मोबाइल वेबसाइट मार्फत पब्जी मोबाइल ३.७ अपडेट डाउनलोड गर्न सक्छन् । क्षेत्र अनुसार रोलआउट फरक हुन सक्ने भएकोले नियमित रूपमा अपडेटहरू जाँच गर्न सिफारिस गरिएको छ ।

१. नयाँ थिम मोड गोल्डेन डाइनेस्टी पब्जी मोबाइल ३.७ अपडेटको साथ आउँदैछ । यसमा, खेलाडीहरूले सुनौलो बालुवाको रहस्यमय साम्राज्य भेट्टाउनेछन् । यस मोडमा, खेलाडीहरूले तैरिरहेका टापुहरू, विलासी दरबारहरू, अलंकृत ओएसिस, र रहस्यमय घडी टावर भेट्टाउनेछन् । खेलाडीहरूले यी स्थानहरू अन्वेषण गर्न, लुकेका खजानाहरू र अन्तरक्रियात्मक तत्वहरू पत्ता लगाउन र विशेष खंजरहरु प्रयोग गर्न सक्छन् ।

थप रूपमा, अपडेटले रोन्डो नक्सा प्रस्तुत गर्दछ, जसले आधुनिक शहरको दृश्यलाई परम्परागत सौन्दर्यशास्त्रसँग मिसाउँछ । यो नक्सामा विलासी शहरहरू, बाँसको जंगलहरू, शान्त तालहरू र तैरिरहेका रेस्टुरेन्टहरू छन् ।

यसमा एकेएम :४१६ को लागि नयाँ बन्दुकको छाला पनि समावेश छ । पब्जी मोवाइल ३.७ अपडेटले नयाँ गेमप्ले मेकानिक्स मात्र प्रस्तुत गर्दैन, समग्र खेलाडीहरुको अनुभवलाई अझ बढाउन सुधारिएको दृश्य प्रभाव, प्रदर्शन सुधार, र बग समाधानहरू पनि समावेश गर्दछ ।

# नेवा: समुदायका महिलालाई चेतनशील हुन आग्रह



ललितपुर । नेवाः समुदायका महिलाहरु भाषा, संस्कृति संरक्षणसंगै राजनीतिक रुपमा अघि बढ्न अपरिहार्य रहेको सम्बद्ध व्यक्तिहरुले औल्याएका छन् । ११५ औं अन्तर र्राष्ट्रिय नारी दिवसको अवसर पारेर बोधिचर्या नेपालले ललितपुर महानगरपालिकाको वडा नं. २१ संगको सहकार्य र छ्यलाबुला ज्यास:को सहयोगमा आयोजना गरेको नेवाः समुदायका महिलाको सशक्तिकरणमा चुनौती र अवसर विषयक कार्यक्रममा उनीहरुले सो खाँचो औल्याएका हुन् ।

सो अवसरमा वाग्मती प्रदेश सरकारका सामाजिक विकास मन्त्री हरिप्रभा खड्गी श्रेष्ठले व्यवस्था परिर्वतनका लागि अग्रज महिला नेतृहरुले जस्तो संघर्ष अहिले गर्नुपर्ने स्थिति नरहेको बताउँदै राजनीतिक अधिकारको सदुपयोग गर्न महिलाहरु अघि बढ्नुपर्नेमा जोड दिए । संविधानले दिएका महिला सम्बन्धी अधिकारलाई अभ्यास गर्दै उनले संघ, प्रदेश र स्थानीय तहको निर्वाचनमा महिलाको उम्मेदवारको सख्या बढाउनुपर्ने बताइन् । उनले भनिन् 'चुनावको टिकट लिनेदेखि, अवसर पाएमा काम गरेर क्षमता प्रमाणित गर्ने अधिकार संविधानले दिएको छ । त्यसका लागि महिला घरबाट बाहिर निस्किनुपर्दछ ।'

कार्यक्रममा २१ वडाका अध्यक्ष रविन्द्र महर्जनले नेवाः समुदायमा राजनीतिक दलमा लाग्न नहुने भनेर प्रायको दिमागमा जरो गाडेर बसेको जनाउँदै त्यस्तो सोच परिर्वतन गर्नुपर्ने बताए । 'राजनीतिमा लागेर नै हामी देशको, समाजको अवस्था बदल्ने हो । राजनीति सबै नीति बनाउने ठाउँ हो । राजनीतिमा नलाग्ने हो भने नेवाः समुदाय सरोकार रहेको क्षेत्रको विकास पछाडि धकेलिने छ ।' अध्यक्ष महर्जनले भने ।

स्थानीय राजनीतिककर्मी सुप्रभा शाक्यले समाज र राजनीतिक दलमा विद्यमान पितृसत्तात्मक सोच र संस्कारसंग जुधेर नै महिलाहरु अघि बढ्नुपर्ने बताईन् । 'पार्टीमा महिलालाई टिकट दिँदा चुनाव जित्ने वा नजित्नेमा अनेक शंका गरिन्छ । पार्टी बाहिर राम्रा भन्दा हाम्रा मानिस चाहिन्छ भन्ने सोच छ । पितृसत्तात्मक सोचको हावी छ । यसलाई चिरेर अघि बढ्नु नै अहिलेको अर्थमा साँचो सशक्तिकरण हुने छ ।'चर्चित गायिका निशा देशारले नारी शक्तिलाई बुझेर आफ्नो सिर्जना कर्ममा लाग्नुपर्ने बताउनुभयो । विभिन्न अवरोध छिचोल्दै जाने अठोट भएमा महिलालाई जीवनको लक्ष्य पुरा गर्न कसैले रोक्न नसक्ने गायिका देशारको भनाई रहेको छ । हस्तकला उद्यमी सवितासिं महर्जनले महिलाले आ-आफ्नो क्षेत्रमा अघि बढ्दै जाने हो भने विभिन्न अवसरहरुको प्राप्त गर्न सकिने बताइन् । महिलामाथि हुने विभेद, पुरातन सोचले गर्दा महिलालाई अघि बढ्न कठिन भएतापनि त्यसको सामना गर्दै जाँदा नै सशक्त हुने पनि उद्यमी महर्जनको भनाई रहेको छ ।

बोधिचर्या नेपालका अध्यक्ष अनिल शाक्यले महिलाहरु शोषित, पीडित भएसम्म पुरुषहरु सुख र शान्तिपूर्वक बाँच्न नसकिने भन्दै महिलाहरुको क्षमता विकास र विभेद अन्त्यका लागि पुरुषहरुपनि संगसंगै लाग्नुपर्नेमा जोड दिए । नेपाल भाषाका शिक्षिका गंगा बज्राचार्य स्थानीय तहमा नेपालभाषाको माध्यमबाट पढाइने नीतिले भाषा, संस्कृतिमा लाग्ने थुप्रै महिलाहरुलाई अवसर प्रदान गरेको बताइन् । मिस नेवाः-११४५ उपाधिका विजेता प्रलिशा शाक्यले बिना विभेद आफ्नो लक्ष्यमा अघि बढ्न सक्न स्थिति र प्रतिभाको प्रस्फुटन गर्न आत्मविश्वासपूर्वक अघि बढ्नुपर्ने बताए । बोधिचर्या नेपालका कार्यकारिणी सदस्य संगीता शाक्यले महिलाले आफूलाई घरभित्रको काममा मात्र सीमित गर्न नहुने बताइन् ।

सो अवसरमा मिस नेवाः- ११४५ उपाधिका विजेतासहित विभिन्न उपाधि विजेताहरुलाई नेवाः परम्परा अनुसार सगुनका साथ सम्मान गरिएको थियो ।

# विनायकमा वार्षिक पुरस्कार वितरण तथा नृत्य प्रतियोगिता



भक्तपुर । विनायक शिक्षा निकेतन इङ्लिस स्कुलमा २०८१ फागुन २४ गते शनिबार वार्षिक पुरस्कार वितरण तथा नृत्य प्रतियोगिताको आयोजना गरियो । विद्यालयको छत्तीसौं वार्षिकोत्सवको अवसर पारेर विद्यार्थीमा अन्तर्निहित प्रतिभा प्रस्फुटन गर्ने उद्देश्यले कार्यक्रमको आयोजना गरिएको थियो ।

काठमाडौं युनिभर्सिटीका शिक्षाविद एवं शोधकर्ताहरू लोकेन्द्र कार्की र मनिराम घिमिरेको विशेष आतिथ्यतामा भएको उक्त कार्यक्रममा कक्षा १ देखि ३ सम्म अध्ययनरत विद्यार्थीहरूको सहभागिता रहेको थियो । विद्यालयका प्राथमिक तहमा अध्यापनरत शिक्षिकाहरूको संयोजनमा आयोजित उक्त कार्यक्रममा बोल्दै विद्यालयका सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाले विद्यालयले स्थापना कालदेखि नै अतिरिक्त क्रियाकलाप, विषयगत क्रियाकलाप तथा एक विद्यार्थी एक सिपको अवधारणामा शिक्षा प्रवाह गर्दै अगाडि बढिरहेको जानकारी गराए ।

कार्यक्रममा विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले विविध अतिरिक्त क्रियाकलाप पढाइमा उत्प्रेरणा जगाउने कसी भएकोले विद्यार्थीको सर्वाङ्गीण विकास हुने र आफूभित्रको प्रतिभा प्रस्फुटन गर्ने उचित प्लेटफर्म पाए विद्यार्थी आफ्नो रुचि र क्षमताको क्षेत्रमा आत्मनिर्भर बन्न सक्ने धारणा व्यक्त गरे ।

सो कार्यक्रममा विद्यार्थी तथा शिक्षक शिक्षिकाहरुले गीत, संगीत तथा नृत्य प्रस्तुत गरेका थिए भने प्रतियोगितामा विजयी विद्यार्थीहरुलाई ट्रफी मेडल र प्रमाण पत्रसमेत प्रदान गरिएको थियो ।

# संसारको एउटा यस्तो देश जहा बच्चा जन्माउन अनुमति छैन



एजेन्सी । के तपाईंलाई थाहा छ संसारमा एउटा यस्तो देश छ जहाँ बालबालिकाको लागि एउटा पनि अस्पताल छैन ? ९५ वर्षमा त्यहाँ एउटा पनि बच्चा जन्मिएन ? यस देशको नाम भ्याटिकन सिटी हो । यो त्यही देश हो जहाँ रोमन क्याथोलिक ईसाई धर्मका सबै प्रमुख धार्मिक नेताहरू बस्छन् । भ्याटिकन सिटी विश्वको सबैभन्दा सानो देश हो । यस देशको सबैभन्दा अचम्मलाग्दो कुरा के छ भने यहाँ अहिलेसम्म एउटा पनि बच्चा जन्मिएको छैन । ११ फेब्रुअरी १९२९ मा स्थापित यस देशमा अहिलेसम्म एउटा पनि बच्चा जन्मिएको इतिहास छैन । यो इटालीको राजधानी रोममा अवस्थित छ ।

भ्याटिकन सिटीमा विवाहको अनुमति छैन

भ्याटिकन सिटीका केही नियमहरू अचम्मलाग्दा छन् । भ्याटिकन सिटीमा, नागरिकहरूलाई उनीहरूको धर्मको कारणले विवाह गर्न वा बच्चा जन्माउन अनुमति छैन । त्यसैले यो देश अन्य देशहरू भन्दा फरक छ । भ्याटिकन सिटीमा आमाबाबु बन्न कडा रूपमा निषेध गरिएको छ । यहाँको जनसंख्याको अधिकांश भाग ब्रह्मचारी पुरुषहरू छन् ।

भ्याटिकन सिटीमा बालबालिकाका लागि कुनै अस्पताल छैन

भ्याटिकन सिटीमा बालबालिकाका लागि कुनै अस्पताल वा कुनै पनि प्रकारको सुविधा छैन । यस्तो अवस्थामा, यदि कुनै महिला गर्भवती भइन् भने, नियम अनुसार उनले भ्याटिकन सिटीमा बच्चा जन्माउन सक्दिनन् । कुनै महिला गर्भवती छिन् वा बच्चा जन्माउन लागेको थाहा पाउने बित्तिकै, त्यतिन्जेलसम्म उनले भ्याटिकन सिटी छोड्नुपर्छ । जबसम्म उनले बच्चा जन्माउँदैनन् ।

भ्याटिकन सिटीको जनसंख्या केवल ४९९ जना छ

संयुक्त राष्ट्रसंघको प्रतिवेदन अनुसार भ्याटिकन सिटीमा केवल ४९९ जना बस्छन् । यहाँ शहर भित्र काम गर्ने मानिसहरूलाई मात्र नागरिकता दिइन्छ । पुरुष र महिला दुवैका लागि विशेष ड्रेस कोड छ, जसमा मिनी स्कर्ट, सर्ट र स्लिभलेस ड्रेसहरू पूर्ण रूपमा प्रतिबन्धित छन् ।

# ट्रम्पको कर नीतिले विश्व बजारमा हलचल, प्रतिवादमा चीन र क्यानडा



एजेन्सी । युक्रेनमा तीन वर्षदेखि जारी युद्ध रोक्ने लक्ष्यका साथ साउदी अरबमा मंगलबार युक्रेनी र अमेरिकी प्रतिनिधिमण्डलबीच वार्ता शुरू भएको छ । अमेरिकी सञ्चारमाध्यम सीएनएनका अनुसार साउदीमा अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्प र युक्रेनी अधिकारीहरूबीच छलफल शुरू भएको हो । उक्त छलफल सकारात्मक हुँदै गएको बताइएको छ ।

अमेरिकाका विदेशमन्त्री मार्को रुबियोले युक्रेनको पछिल्लो मनस्थितिबारे जानकारी लिन वार्ता आयोजना गरिएको बताएका छन् । पत्रकारसँग कुरा गर्दै उनले भने, 'युक्रेनले युद्ध समाप्तिका लागि कस्तो तयारी गरेको छ र कुन सम्झौतासम्म पुग्न सक्छ भन्ने जानकारी लिने प्रयोजनका निम्ति वार्ता आयोजना गरिएको हो ।'

उनले यो वार्ताले अमेरिकाले युक्रेनलाई दिँदै आएको सैन्य सहयोग र खुफिया जानकारीमा लगाइएको रोक कायमै राख्ने या हटाउने निर्णयका लागि निर्णायक हुने बताए । 'युक्रेनको स्थिति 'सुन्ने मोड'मा छ । अहिले उसले केही भनिहाल्ने परिस्थिति सिर्जना भएको छैन । यो वार्ताको नतिजाले अमेरिका र युक्रेनबीचको भविष्यको सम्बन्धलाई प्रभाव पार्न सक्छ', रुबियोले भने । केही दिन पहिले अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्प, उपराष्ट्रपति जेडी भेन्स र युक्रेनी राष्ट्रपति भोलोदिमिर जेलेन्स्कीबीच ह्वाइट हाउसमा भएको तनावपूर्ण भेटघाटपछि अमेरिका र युक्रेनले आफ्नो सम्बन्ध सुधार्ने प्रयास गरिरहेका छन् ।

जेलेन्स्कीले यो वार्ताको लक्ष्य शान्ति कायम गर्नु नै हो भनेका छन्, तर उनी यस भेटमा उपस्थित हुने छैनन् । यस वार्तामा अमेरिका र युक्रेनबीचको सम्बन्धलाई मध्यनजर राख्दै युद्धविरामको सम्भावना र यसले पूर्वी यूरोपमा पार्न सक्ने प्रभावलाई ध्यानमा राखिएको छ ।

यस वार्ताको नतिजाले युक्रेन र रूसबीचको युद्ध अन्त्य गर्न मद्दत गर्न सक्ने बताइएको छ । यता युद्ध अन्त्यका लागि अमेरिकाको सक्रियतामा पहल भइरहँदा उता रुसले युक्रेनमाथिको आक्रमण थप बढाउँदै लागेको छ । युक्रेनलाई अमेरिकाले दिँदै आएको सैन्य र आर्थिक सहायता पछिल्लो समय रोकिएको छ ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### ज्ञानेन्द्र शाहले राजनीतिमा ल्याएको तरङ्ग !

फागुन २५ गते आइतबार राजधानी काठमाडौंमा पूर्वराजा ज्ञानेन्द्र शाहको पोखराबाट काठमाडौं आउने सामान्य घटनालाई पनि निकै अतिरञ्जित रुपमा प्रचार गरियो । मानौ नेपालमा ठूलै परिवर्तन हुन लागेको छ । यसमा विदेशी खासमा भारतीय मिडियासमेत अतिरजिंत रुपमा प्रयोग भएको देखियो । काठमाडौंको विमानस्थलदेखि उनलाई निवाससम्म पुऱ्याउन राजावादी दलको रुपमा रहेको राष्ट्रिय प्रजातन्त्र पार्टी र शाहको समर्थकहरु समेत हजारौंको संङ्ख्यामा व्यक्तिहरु सडकमा ओर्लिएको देखिए । विसं २०६५ जेठ १५ गते नारायणहिटी राजदरबार त्यागेका ज्ञानेन्द्र शाहलाई फेरि तेस्रो पटक राजा बनेर श्रीपेच पहिरीने सोखलाई उनका समर्थकहरूले निकै मलजल गरेको देखियो । यसले बर्तमान देशको राजनीतिमा तरङ्ग ल्याएको छ ।

वि.सं. २०५८ १९ गते उनका दाजु राजा वीरेन्द्र शाहको वंशनाशबाट सिंहासनमा पुगेका ज्ञानेन्द्र शाहलाई 'देखिने र सुनिने' राजाको रूपमा स्थापित हुने हतार र हुटहुटीले २०६० माघ १९ गते आफैँलाई नयाँ 'महेन्द्र'का अवतारमा उभ्याए । त्यस बखत संवैधानिक राजाकै रूपमा नैतिकताको आधारस्तम्भ बनेर राजनीतिक दलहरूलाई अनुशासित गर्ने अभिभावकको भूमिकामा रहन सकेको भए नेपालको इतिहास अर्कै हुन्थ्यो । तर उनकै गलत कदमका कारण राजतन्त्रलाई विश्वास नसकिने भन्दै जनताले गणतन्त्र स्थापित गरिसकेका छन् ।

गणतन्त्र स्थापना पछि पुनः राजतन्त्रका लागि संघर्ष गर्नु भनेको उल्टो बाटो हिड्नु हो । जुन सम्भव छैन् । यहाँ राजाको नामबाट गणतन्त्र प्राप्तीका लागि संघर्ष गरेका बर्तमान सत्ता साझेदार र प्रमुख प्रतिपक्षी राजनीतिक दलहरुको जनतामा अलोकप्रियताको स्थितिलाई आफ्नो पक्षमा पार्दै आउने निर्वाचनको लागि आधार तयार गर्ने रणनीतिका रुपमा ज्ञानेन्द्र शाह प्रयोग हुन सक्दछ । अर्थात्, ज्ञानेन्द्र शाहका लागि अब लड्नु वा नलड्नुमा कुनै तुक छैन ।

नेपालमा बारम्बार जनताले लोकतान्त्रिक शक्तिहरूलाई सत्तामा पुऱ्याउँदा पनि राजनीतिक दलका नेताहरू जनताप्रति जिम्मेवार भएर काम गर्न नसकेको तथ्य कसैबाट लुकेको छैन । राज्यको कुनै पनि निकायमा राजनीतिक दलको सदस्यता नभएको व्यक्तिले प्रवेश पाउने अवस्था छैन । राज्यले प्रदान गर्ने सेवा र सुविधासमेत राजनीतिक दलका नेता तथा कार्यकर्ताले सहजीकरण नगरेको अवस्थामा जनताले उपभोग गर्न पाउने अवस्था छैन ।

दलहरू जनमुखी नभएर कार्यकर्तामुखी भएका छन् । यस्तो अवस्थामा कसैले पनि राजनीतिक नेतृत्वको विरोधमा झन्डा उचाले राज्यको काम कारबाहीबाट निराश जनताले त्यस्तो समूहलाई साथ दिन पुग्छन् । स्थानीय निर्वाचनमा बालेन, हर्कजस्ता स्वतन्त्र उमेदवारले मत पाउनुको कारण पनि त्यही हो । संसदीय निर्वाचनमा रवि लामिछाने नेतृत्वको राष्ट्रिय स्वतन्त्र पार्टीले सोच्दै नसोचेको २० सांसद विजयी बनाउन सक्नुको कारण पनि त्यही हो । त्यसैले पूर्वराजा ज्ञानेन्द्र शाहले आफ्नो जीवनको उत्तरार्धमा राजनीतिक शक्ति पुनःप्राप्तिका लागि जुन संघर्ष अघि बढाएका छन् त्यसले उनलाई के फाइदा हुन्छ त्यो समयले बताउनेछ तर त्यसले राजनीतिमा एक ऊर्जा थपेको छ र राजनीतिक दललाई नैतिकरूपमा थप जिम्मेवार हुन सकारात्मक दबाब दिएको छ । राजनीतिक दलका नेताहरूले राजावादीको प्रतिवादमा समय खेर फाल्नुको साटो आत्मसमीक्षा गरी शासन शैली र आफ्नो व्यवहार सच्याउन ध्यान दिनु उचित हुनेछ । नकि शासन व्यवस्थामा आमूल परिवर्तन हुँदा पनि राज्य सञ्चालनमा निषेधको सामन्ती अभ्यास हुँदै आएको छ । काठमाडौंलगायतका सहरमा बेला न कुबेला थोपरिने 'निषेधाज्ञा' यही प्रशासनमा जमेको सामन्ती संस्कारको उदाहरण हो । काठमाडौंमा निषेधाज्ञा लागु गर्नु सामान्य अभ्यासजस्तै भइसकेको छ । प्रशासनिक क्रियाशीलता बढाएर कानुन कार्यान्वयनमा दृढता देखाउनभन्दा निषेधको कवचमा सुरक्षित रहन खोज्ने मानसिकता शासक र प्रशासन दुवै मुक्त हुन जरुरी छ ।

# प्रधानमन्त्रीज्यू ! सत्ताको उन्मादले गद्दी फेरिन्छ, बुद्धि फेरिंदैन

● संकेत कोइराला

कुनै ठाउँमा चार मूर्ख रहेछन् । उनीहरूले उद्यमका लागि पेट्रोल पम्प खोल्ने निधो गरेछन् । आश्चर्य, एउटा गाडी पनि इन्धन भर्न आएनछ । किन भनेर खोज्दै जाँदा थाहा भयो- 'उनीहरूले घरको एक तलामाथि पम्प खोलेका रहेछन् ।' लौ भएन भनेर त्यही ठाउँमा रेष्टुरेन्ट खोलियो । अहँ, त्यसपछि पनि चरोमुसो छिर्दैन ! भएछ के भन्दा रेष्टुरेन्ट त खोले तर पेट्रोल पम्पको साइनबोर्ड निकाल्नै बिर्सिएछन् । अन्तिम विकल्पमा ती मुर्खले ट्याक्सीमा आम्दानी देखेर ट्याक्सी किनेछन् । ट्याक्सी चढ्ने ग्राहक खोज्न त्यही ट्याक्सी चढेर चारैजना शहर पसे । ट्याक्सीभरि मान्छे देखेपछि भरिएको ट्याक्सी ठानेर कसैले सोध्ने दरकार नै राखेन ।

नेपालमा भएका पटक पटकका राजनीतिक क्रान्ति यिनै मूर्खहरूको व्यवसाय जस्तै बन्यो । कोही पोखरा, कोही महेन्द्रनगर, कोही झापा पुग्ने राजनीतिक स्वार्थ बोकेका नेताहरू सार्वजनिक खपत र पदीय स्वार्थका लागि एउटै गाडीमा चढेर यात्रा आरम्भ गर्ने गरेका छन् । जब मुग्लिन आइपुग्छ, त्यसपछि माथापच्ची सुरु हुन्छ । गाडी एउटा छ, दाबी सबैको । गाडीको हातमा स्टेयरिङ त छ, दिशानिर्देश छैन । त्यो गाडी कुन उद्देश्यका लागि गुडेको छ भन्नेमा सबैभित्र अलमल र संशय छ ।

हाल मुलुकमा क्रियाशील संविधान त्यही गाडीजस्तै बन्यो । ३ करोड जनताको भावना बोक्नुपर्ने संविधानले प्रोजेक्ट पेपरभन्दा माथिको औकात बोक्न सकेन । देश 'भागशान्ति जय नेपाल' बन्नुको परिणाम त्यही अप्राकृतिक कर्मको खेल हो । कागजमा लेखिएको नियमभन्दा स्वधर्म सर्वाधिक ठूलो कानून हो । खाना खाए अघाइन्छ भनेर कतै लेख्न पर्दैन । जाडोमा तातो र गर्मीमा चिसोको चाह सबै जात, समूह र भूगोलका मानिसलाई हुन्छ भन्ने सत्य कुनै नियमले बाँधिने विषय होइन ।

सत्ता र शक्तिको उन्माद मदिराको मातभन्दा उखरमाउलो हुन्छ । त्यसमाथि प्रधानमन्त्री केपी शर्मा ओलीभित्र व्याप्त आत्मरतिको रसायनले मानिस त के प्रकृतिका नियम फेर्नेसम्मको धृष्टता प्रदर्शन गर्छ । उनले सूर्य उदाउने- अस्ताउने समय, वेदका ऋचा, रुखको रङ्ग, पानीको बग्ने धर्म, हावाको गति, महाभारत, रामायणका कथा फेर्ने घोषणा गरिदिन सक्छन् । ओलीले चाहे भने सुपर्णखालाई सीता र रावणलाई रामको ओहोदा दिन सक्छन् । कृष्णलाई अर्जुनको कारिन्दा घोषणा गरिदिन बेर लगाउँदैनन् । भीष्म पितामह, द्रोणाचार्य, कृपाचार्यजस्ता पात्रलाई देशद्रोही करार गर्न सक्छन् । 'हट केपी बा' भनेर दुर्गेश थापाले एउटा मञ्चमा हल्ला गरिदिने हो भने उनी स्वरसम्राट उपाधिका हकदार हुनसक्छन् । प्रशंसाको रोग लागेपछि त्यसको उपचार हुँदैन ।

नमान्नेको हकमा संविधान कागज हो । आफूभित्रको विवेकले त्यसको सम्मान गर्ने हो । मदिरालयमा सजाएर राखिएका मदिरा आफैँ झगडा गरेको कसले देखेको छ ? एउटा बोतलले अर्को बोतललाई किमार्थ हिर्काउँदैन । पुस्तकालयमा राखिएका वेद, कुरान, बाइबल, त्रिपिटक जुधेर आफ्नो महत्ता प्रदर्शन गरेको कसलाई थाहा छ ? जब मानिसको विवेकमा बिर्को लाग्छ, यिनै अमूर्त वस्तुलाई आधार बनाएर जुधाउने काम हुन्छ । 'तँ ठूलो' र 'म ठूलो' घृणित खेल हुन्छ । सबै धर्मावलम्बीका मानिसलाई गर्मीमा चिसो र जाडोमा तातो प्रिय हुन्छ । हो, यही प्रियपन धर्म हो । मानव सेवा, मानव एकता नै त धर्म हो । जुन धर्म, जुन भूगोलमा भए पनि जब मानिस तृप्त हुन्छ, त्यसपछि उसको ओठबाट मन्द मुस्कान छरिन्छ । यो मुस्कान यस धराका सबैले बुझ्ने भाषा हो ।

संसारका सबै धर्म, सबै राजनीतिक दर्शनले खोजेको स्वर्ग भनेकै हाँसो हो । राजनीति भनेको ३६५ दिन नै सेवाको ढोका बन्द नगर्ने सर्त स्वीकार्नु हो । यो अविराम जनताको सेवाबाट निसृत हुन्छ । जब पद, प्रतिष्ठा र नाफाको दाउपेच सुरु हुन्छ, त्यो घडीमा राजनीति व्यापारमा अनुवाद हुन्छ । हामीले तय गरेको यात्राले अन्ततः पुगिने धोका नगरी नै हो । काठमाडौंबाट पोखराका लागि छुटेको गाडी मुग्लिनबाट त्रिशूली पार नगरी नारायणगढतर्फ लागेपछि पुग्ने झापा, नत्र महाकाली हो । जाँड, भाड, धतुरो खाएको तालमा यात्रा तय गरेपछि गन्तव्य धरापमा पर्नु स्वाभाविकै हो ।

एक टन सिद्धान्तको तुलनामा एक ग्राम कामको धेरै महत्व हुन्छ । मेलम्चीको पानी धारा धारामा नियमित गरिदिए धेरै प्रश्नको उत्तर त्यसले दिन्छ । कमसेकम तीन करोड जनताले आँखा चिम्लेर एक गिलास शुद्ध पानी ख्वाउने राजनीतिको केन्द्रीय एजेण्डा कहिले बन्ला ? ट्याक्सीमा मिटर छ, तर त्यो चल्दैन । सृष्टि चलाउने सरकार प्रमुख आउँदा ट्याक्सीको मिटर चलेन । १२ सय तिरेर विराटनगरबाट काठमाडौं पुगिन्छ, त्यहाँबाट गन्तव्य पुग्न ट्याक्सीमा त्यति नै पैसा खर्चिनु पर्छ । यो घोडाभन्दा अघि बग्गीको अवस्थामा कहिले परिवर्तन आउला ? मोबाइल सबैका हातमा पुऱ्याएर लत बसाउन त सरकार सफल भयो । तर रिचार्ज गर्ने आम्दानीको श्रोत के हो ?

जिब्रोमा नून बोकेर तरकारी चाख्ने राजनीतिक संस्कारले पुस्तौनी घर गर्दा हरेक राजनीतिक परिवर्तन चटक बन्दै आए । राजनीतिक स्वतन्त्रताले कसैको पेट भरिन्न । न त क्रान्तिले आगो बाल्छ । आगो बाल्न त सानो भए पनि आगोकै झिल्को चाहिन्छ । एउटा विद्वानका लागि मूर्खको प्रश्न सर्वाधिक ठूलो विश्वविद्यालय हो । त्यस्तै सबैथोक भएर पनि व्यवस्थापन हुन नसकेको भूगोल सफल राजनेताका लागि चिट्ठा हो । यो सत्य नबुझेर जब नेताको बोली, बचन व्यवहार नै मूर्खको कोटीमा अनुवाद हुन्छ, त्यसको दुष्परिणाम धरामा उभिएकादेखि गर्भमा रहेकाले समेत भोग्न् पर्छ ।

अरू हिँडेको बाटो हिँड्ने नेता नभएर पथिक हो । नेताले बाटो बनाउने हो । बाटो नभएको ठाउँमा पाइतालाको डोब छोड्ने नेता कहिल्यै मर्दैन । अमेरिकी तत्कालीन राष्ट्रपति अब्राहम लिङ्कनलाई सोधियो- 'तपाईं सामान्य जुत्ता सिलाउनेको छोरो कसरी अमेरिकाको राष्ट्रपति हुनुभयो ?' उनले मुस्कुराएर जवाफ दिए- 'मैले पाइला पाइलामा आफ्नै परीक्षा लिएँ । हरेक असफलताबाट केही सिकेँ । त्रुटि सुधार्दै, नयाँ बाटो पहिल्याउँदै गएँ । सफलताको सूत्र पुस्तकमा नभई मेहनतमा हुन्छ भन्ने सत्य आत्मसात गरेँ ।'

सुख र सामान्य सोचले परिवर्तन सम्भव छैन । पागलपन र बैराग्यले विकासको ढोका खोल्छ । त्यसैले नेतागणहरू चटके नभएर पागल बन्न अपरिहार्य छ । देश चलाउने योग्यता के हो ? पारखीहरू भन्छन्- 'खाँटी कूटनीतिज्ञ त्यो हो, जो महिलाको जन्मदिन सम्झन्छ तर उमेर सम्झदैन ।' जसले विश्वमा परिवर्तन ल्याए, आरम्भका दिनमा तिनीहरू इतिहासका प्रहसन पात्र भए । सन् १६०० मा गणितज्ञ एवं खगोलविद् गिआर्दानो ब्रुनोले पृथ्वी बाहिर जीवन हुनसक्ने नवीन विचार ल्याए । उनलाई धर्मको खिलाफ बोलेको भन्दै रोमको मध्य शहरमा जिउँदै जलाइयो ।

मानव बस्तीको खोजीमा समुद्री यात्रामा निस्कने बहस चल्दा क्रिष्टोफर पागल बनाइए । यस्तै चार्ल्स डार्बिनले मानवलाई बाँदरको सन्तानभन्दा समाजले मगज खुस्किएको भन्दै जीवनभर अपमान दियो । ओर्भिल राइट र विल्बर राइटले आकाशमा उड्ने परिकल्पना गर्दा रोयल सोसाइटीका अध्यक्षले उडाउन् उडाए । डिज्नेल्याण्डको प्रस्ताव ल्याउँदा वाल्ट डिज्नेलाई घरकै सदस्यले पागलको उपमा दिए । विना तार सूचनाको एजेण्डा ल्याउने मार्कोनीको खेदो खनेर त्यो बेलाको समाज वर्षौं थाकेन । हो, यस्तै पागल बन्ने हाम्रो पालो कहिले हो ?

भगवानले त भगवानको विशेषण पाउन थुप्रै अग्निपरीक्षा पास गर्नुपर्छ भने मानिसको के कुरा ? विश्वका प्रख्यात सङ्गीतज्ञ मोजार्टसँग बाल्ने दाउरा थिएन, न त लगाउने त्यानो कपडा नै । यहाँसम्म कि खुट्टामा लगाउने मोजा हातमा लगाएर उनी सङ्गीत सिर्जना गर्थे । खान नपाएर कलिलो उमेरमै कुपोषणले बितेका मोजार्टले छोटो समयमै आफूलाई विश्वभर अमर बनाए ।

चार्ली च्याप्लिनले बाउआमाले छोडेर गएपछि सडकमा मागेर आफ्नो प्राण धाने । कालान्तरमा विश्व विख्यात हास्यकलाकारको ख्याति यिनको नामसँगै जोडियो । असह्य दुःखको पीडा खप्न नसकी विश्व प्रसिद्ध लेखक म्याक्सिम गोर्कीले आफ्नो ज्यान आफैँ लिए । यतिका पीडाका शूलबीच पनि मानिसले अमरत्वको झण्डा गाडेका छन् । आफूमाथि पीडा हावी हुन नदिएर सुन्दर जीवनको सूत्र फेला पारेका छन् भने हामी दुःखको लेस नपाएकाहरूलाई कर्मको यज्ञ गर्न के ले छेकेको छ ?

परिस्थितिले नभई मनस्थितिले टुट्छ मान्छे । यो धरामा रहेका हरेक मानिसको खाने थाल र जिन्दगीको हाल अलग छ । जन्मिँदाको खाट र मर्दाको घाट अलग छ । वास्तवमा आफ्नो को हो ? त्यो देखाउने हक समयलाई मात्र छ । गल्तीको जिम्मेवारी नलिने मानिस कहिल्यै अघि बढ्न सक्दैन । उज्यालोमा मात्र सबैले साथ दिने हुन्, अँध्यारोमा त आफ्नै छायाँले पनि छोडिदिन्छ । कहिल्यै नभुलौं, फूल बाँड्ने मान्छेको हातमा सुगन्ध पनि बस्छ । सत्य नबुझी अनुमान गर्नु दुःखी हुनुको प्रमुख कारण हो ।

कोही कसैको न पछि, न अघि नै लाग्न जरुरी छ । नेतृत्वका लागि विश्वास गरेको पात्र नालायक निस्कियो या आफूले नेतृत्व गर्दा अरूले विश्वास गरिदिएनन् भने हालत के हुन्छ ? त्यसैले यात्रा समदूरीमा गरेर बाको सट्टा साथी बन्नुस् प्रधानमन्त्रीज्यू । बाटो हिँड्दा प्रकाश भेट्नु भएको छैन भने आफैँ बत्ती भइदिनुस् । आस्थाले बालिएको दियो हावाले मात्र निभ्दैन । तेल निखिएर पनि निभ्छ । तेल नभएर बत्ती निभ्नु भनेको तपाईंभित्रको आयतन खुम्चनु हो । एउटा असल र कर्मशील नेताले मात्र आशा, कल्पना र विश्वासको त्रिवेणी निर्माण गर्न सक्छ । मुखमा फिँज निकालेर अन्टसन्ट बोल्ने काम त रत्नपार्कको ओखती बेच्नेले पनि गर्छ । खबरहब

# गणतन्त्रवादी शक्तिहरूबीच व्यापक मोर्चाबन्दी आवश्यक



सर्लाही । नेपालमा संघीयता, गणतन्त्र, धर्मनिरपेक्षता र समावेशी लोकतन्त्रलाई कमजोर बनाउने षड्यन्त्र तीव्र भइरहेको वर्तमान परिस्थितिमा गणतन्त्रवादी दलहरू एकताबद्ध भएका छन् ।

नेपाल संघीय समाजवादी पार्टी, बहुजन एकता पार्टी नेपाल, नेपाल जनजागृति पार्टी र नेपाल सद्भावना पार्टी लगायतका शक्तिहरु बीच नयाँ मोर्चा गठन गर्दै, पूर्वराजा ज्ञानेन्द्र शाहद्वारा गरिएका प्रतिगमनकारी गतिविधिहरूको कडा विरोध गरिएको छ ।

सर्लाहीको नवलपुरमा सम्पन्न बैठकमा पार्टीका शीर्ष नेताहरू उपस्थित रहेर साझा एजेण्डा तय गर्ने, मोर्चाको सांगठनिक संरचना बनाउने र बृहत् महागठबन्धन निर्माणका लागि पहल गर्ने निर्णय गरेका छन्। मोर्चाले पूर्वराजाले राज्यबाट प्राप्त विशेष सुविधा खारेज गर्न सरकारसँग माग गर्दै, संघीय लोकतान्त्रिक व्यवस्था विरुद्ध कुनै पनि प्रतिगमन प्रयासलाई कडा प्रतिरोध गर्ने चेतावनी दिएको छ।

बैठकमा मोर्चामा सम्मिलित नेपाल संघीय समाजवादी पार्टीका अध्यक्ष तथा पूर्वगृह राज्यमन्त्री मोहम्मद रिजवान अन्सारी, बहुजन एकता पार्टी नेपालका अध्यक्ष हरिनन्दन कुमार रंजन, नेपाल जन जागृति पार्टीका अध्यक्ष डि.पी. सहनी निषाद, नेपाल सद्भावना पार्टीका अध्यक्ष राम कुमार महतो सहभागी बैठकले गठबन्धनलाई अझै बढी शक्तिशाली र विस्तारित बनाउनेमा एकमत थिए ।

बैठकमा सहभागी नेताहरूले पूर्वराजा ज्ञानेन्द्र शाहको पछिल्ला गतिविधिप्रति गम्भीर चिन्ता व्यक्त गर्दै, राजसंस्थालाई पुनःस्थापना गर्ने प्रयासहरूलाई पूर्ण रूपमा अस्वीकार गर्ने घोषणा गरे । उनीहरूले लोकतान्त्रिक सरकारले नै राजसंस्थालाई पोषण गर्ने प्रवृत्ति अविलम्ब बन्द गर्नुपर्नेमा जोड दिए ।

मोर्चाले सरकारलाई सम्बोधन गर्दै पूर्वराजालाई सरकारले दिइरहेका विशेष सुविधा तुरुन्त खारेज, संघीयता, गणतन्त्र, धर्मनिरपेक्षता र लोकतान्त्रिक उपलब्धिहरूको रक्षा, राजसंस्था पुनर्स्थापित गर्न खोज्ने कुनै पनि असंवैधानिक गतिविधि रोक्न आग्रह गरेको छ ।

गणतन्त्रवादी शक्तिहरूबीच व्यापक मोर्चाबन्दी बनाई संविधानको रक्षा गर्नु पर्ने भन्दै अंसारीले भने, “संघीयता कार्यान्वयनमा चरम लापरबाही भइरहेको छ । मधेशी, दलित, आदिवासी, मुस्लिम तथा उत्पीडित समुदायको अधिकार रक्षा गर्न यो मोर्चा निर्णायक बन्नेछ ।”

यस्तै, हरिनन्दन कुमार रंजनले भने, “बहुजन समाजलाई सधैं पछाडि पारेर नेपाली राजनीति केही जाति, वर्ग विशेषको नियन्त्रणमा राखियो । यो मोर्चाले उत्पीडित वर्गको हक सुनिश्चित गर्नेछ ।”

डि.पी. सहनी निषादले विचार राख्दै “नेपालमा गणतन्त्रको मर्म अनुरूप शासन व्यवस्था अगाडि बढ्न सकेको छैन । समानुपातिक, समावेशी लोकतन्त्र बलियो बनाउन हामी सशक्त लडाइँ लड्नेछौं ।”

राम कुमार महतोले भने, “गणतन्त्र र संघीयताका उपलब्धिहरू गुम्न दिनेछैनौं । कुनै पनि प्रतिगामी शक्ति सफल हुन पाउँदैन ।”

मोर्चाको नीति निर्माण, सांगठनिक संरचना, तथा कार्ययोजना तय गर्न चार सदस्यीय समिति गठन गरिएको छ, जसमा मधेश प्रदेशका सांसद बिमला अंसारी, राजाराम पासवान, भुजेन्द्र सहनी र डा. कृष्ण चन्द्र प्रसाद साह सदस्य रहेका छन् ।

संविधान संशोधन गरी विभेदकारी प्रावधान हटाउने, संघीयता प्रभावकारी कार्यान्वयनका लागि नीति निर्माणमा दबाब दिने, मधेशी, दलित, आदिवासी, मुस्लिम र उत्पीडित वर्गको हक सुनिश्चित गर्ने, पूर्ण समानुपातिक निर्वाचन प्रणाली लागू गराउने र शिक्षा, स्वास्थ्य, रोजगारीमा उत्पीडित समुदायको पहुँच वृद्धि गराउने, राजसंस्थावादी तथा प्रतिगमनकारी शक्तिहरूको विरोध गर्दै गणतन्त्रको रक्षा गर्ने जस्ता उद्देश्यसहित गठबन्धन घोषणा गर्ने तैयारी भइरहेको छ ।

बैठकमा चैत्र २३ गते जनकपुरधाममा बृहत् घोषणा सभा गर्ने निर्णय गरिएको छ । सो अवसरमा मोर्चाका नेताहरू, बुद्धिजीवी, सामाजिक अभियन्ता, पत्रकार, तथा गणतन्त्र समर्थक नागरिकहरू सहभागी हुनेछन् ।

नयाँ राजनीतिक ध्रुवीकरणको संकेत

दलबीचको मोर्चा निर्माण नेपाली राजनीतिक परिदृश्यमा नयाँ ध्रुवीकरणको संकेत हो । यो केवल चुनावी तालमेलका लागि नभई, संघीय लोकतान्त्रिक व्यवस्थालाई संस्थागत गर्दै उत्पीडित वर्गको सशक्त राजनीतिक उपस्थिति सुनिश्चित गर्ने अभियान हो भन्दै नेताहरुले तैयारीलाई तिव्र बनाएको छ ।

मोर्चाले पूर्वराजाको प्रतिगमनकारी रणनीति असफल बनाउने प्रतिबद्धता व्यक्त गर्दै, लोकतन्त्रलाई सुदृढ बनाउन अन्य समान विचारधाराका दलहरूसँग सहकार्य गर्ने स्पष्ट पारेको छ। चैत्र २३ गते जनकपुरमा हुने घोषणा सभा, संघीय लोकतान्त्रिक शक्तिहरूको एकताको ऐतिहासिक क्षण बताएका छन् ।

# तामा वा स्टील ? पानी पिउनको लागि कुन बोतल राम्रो हुन्छ ?

एजेन्सी । पानी हाम्रो स्वास्थ्यको लागि धेरै महत्त्वपूर्ण छ र यसलाई पिउने तरिका पनि उत्तिकै महत्त्वपूर्ण छ । पछिल्ला केही वर्षहरूमा, तामा र स्टीलका बोतलहरू तिनीहरूको गुणस्तर र स्वास्थ्य लाभका कारण धेरै लोकप्रिय भएका छन् । यी बोतलहरूमध्ये कुन बोतल स्वास्थ्यको लागि बढी फाइदाजनक छ भन्ने प्रश्नहरू प्रायः उठ्ने गरेको छ । तामा र स्टील दुवै बोतलका आ-आफ्नै फाइदाहरू छन्, तर तपाईंलाई कुन राम्रो हुन्छ भनेर जान्नु उत्सुक लागेको होला ।

तामाका बोतल - यसको फाइदा के हो ?

आयुर्वेदिक दृष्टिकोणबाट तामाका भाँडाहरू अत्यन्तै लाभदायक मानिन्छन् । तामाको भाँडोमा राखिएको पानीले प्राकृतिक रूपमा एन्टी-ब्याक्टेरियल गुण प्राप्त गर्छ । तामामा अद्वितीय गुणहरू हुन्छन् भन्ने विश्वास गरिन्छ जसले ब्याक्टेरिया मार्न र शरीरलाई हानिकारक तत्वहरूबाट बचाउन मद्दत गर्दछ । तामाको भाँडोमा राखिएको पानी पिउनाले पाचन प्रणालीमा सुधार आउँछ, आन्द्राको स्वास्थ्यमा सुधार आउँछ र शरीरबाट विषाक्त पदार्थहरू बाहिर निकाल्न मद्दत गर्छ ।

तामाको भाँडोमा राअिएको पानीमा एन्टिअक्सिडेन्ट प्रशस्त मात्रामा पाइन्छ, जसले शरीरका कोषहरूलाई जोगाउँछ र बुढ्यौलीको प्रक्रियालाई सुस्त बनाउँछ । यो थाइराइड र हार्मोनल सन्तुलन कायम राख्न पनि उपयोगी छ र मानसिक स्वास्थ्यमा पनि सकारात्मक प्रभाव पार्न सक्छ । पानीलाई तामाको भाँडोमा ६-८ घण्टासम्म राखिन्छ, त्यसपछि यो पानी स्वास्थ्यको लागि फाइदाजनक हुन्छ ।

यद्यपि, समय समयमा तामाको बोतल सफा गर्नु धेरै महत्त्वपूर्ण छ । यसलाई कागती र नुन वा भिनेगरले धुनुपर्छ, ताकि भित्र फोहोर जम्मा नहोस् र अक्सिडेशनको प्रक्रिया पनि सुस्त होस् । यसलाई राम्ररी सुकाएपछि मात्र प्रयोग गर्नुपर्छ ।

स्टीलका बोतल - यसको फाइदा के हो ?

स्वस्थ रहनको लागि स्टीलका बोतलहरू पनि राम्रो विकल्प मानिन्छन् । यसमा रासायनिक तत्वहरू हुँदैनन् र न त पानीलाई प्रदूषित गर्छन् न त यसको स्वाद नै परिवर्तन गर्छन् । स्टेनलेस स्टीलमा खिया लाग्दैन र यो लामो समयसम्म टिक्ने, बलियो र सुरक्षित हुन्छ । यसबाट बनेका बोतलहरू वातावरणको लागि पनि राम्रो मानिन्छ किनभने स्टेनलेस स्टील १००% पुनः प्रयोग गर्न मिल्ने हुन्छ ।

यसबाहेक, स्टीलका बोतलहरू सफा गर्न धेरै सजिलो हुन्छ र दाग र गन्धको प्रतिरोधी हुन्छ । यी बोतलहरूमा इन्सुलेशन हुन्छ, जसले पानीलाई लामो समयसम्म चिसो वा तातो राख्छ । यद्यपि, केही स्टीलका बोतलहरूमा निकल हुन्छ, जसले केही मानिसहरूमा एलर्जी निम्त्याउन सक्छ । त्यसैले, स्टीलको बोतल किन्दा यो उच्च गुणस्तरको छ वा छैन भनी सुनिश्चित गर्नु महत्त्वपूर्ण छ ।

राम्रो विकल्प के हो?

यदि तपाईं आयुर्वेदिक फाइदाहरू र एन्टिमाइक्रोबियल गुणहरू खोज्दै हुनुहुन्छ भने, तामाको बोतल तपाईंको लागि उपयुक्त हुन सक्छ । तर यदि तपाईं लामो समयसम्म टिक्ने र वातावरणमैत्री बोतल चाहनुहुन्छ भने, स्टीलको बोतल एक राम्रो विकल्प हुन सक्छ ।

# लायन्स गभर्नरका लागि भक्तपुरका प्रजापतिको उम्मेदबारी




भक्तपुर । लायन्स क्लबको आगामी बैशाख १३ गते राजधानीमा हुने तेस्रो वार्षिक महाधिवेशनमा द्वितीय भाइस डिष्ट्रिक्ट गभर्नर पदका लागि भक्तपुरका लायन गोकुलप्रसाद प्रजापतिले उम्मेदबारी दर्ता गराएका छन् । उनको यो हालसम्मको एकल पहिलो उम्मेदबारी हो । यद्यपि उम्मेदबारी दर्ता बैशाख १३ गते महाधिवेशनको एकहप्ता अघिसम्म दिन पाइने छ ।

लायन्समा २३ बर्षदेखिका अथक योद्धा समाजसेवी प्रजापति भक्तपुर निवासी हुन् । उनीसँग लायन्सको जोन तथा रिजन चियर पर्सन, डिष्ट्रिक्टका चेयरपर्सन, एरिया तथा चिफ एरिया र क्लष्टर कोअर्डिनेटर, डिष्ट्रिक्ट क्याविनेट ट्रेजरर, एलसिआईएफ कोअर्डिनेटर लगायत विभिन्न तहको लिडरशिपमा रहेर काम गरेको सफल अनुभब छ। राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रमाणपत्र तथा विभिन्न पदकहरु प्राप्त गरी सफल अनुभब बटुलिसकेका उनी सरल सहयोगी व्यक्तित्वका धनी पनि हुन् ।

लायन्सको नियम अनुसार यो पदमा विजयी प्राप्त गरे उनी लायन्स अन्तर्राष्ट्रिय अन्तर्गत डिष्ट्रक्ट ‘जी’ को सर्वोच्च पद डिष्ट्रक्ट गर्भनरमा पुग्न योग्य हुने छन् । यो भक्तपुरबासीका लागि गौरबको विषय पनि हुनेछ । किनकि लाइन्समा यो चुनावबाट विजयी व्यक्ति एक वर्ष सेकेण्ड भाइस डिष्ट्रक्ट गभर्नर, अर्को एक वर्ष फष्ट भाइस डिष्ट्रक्ट गभर्नर हुँदै तेश्रो वर्षमा लायन्सको सर्वोच्च पद डिष्ट्रक्ट गभर्नर हुने ब्यबस्था छ ।

‘सबैका प्रिय, मेहनती, शालिन, इमान्दार अनि सक्षम व्यक्तित्व भएकाले उनी एक्लो उम्मेदबार पनि हुनसक्छन, भक्तपुर लायन्स सेवा समन्वय समिति एवं लायन्स क्लव अफ भक्तपुर सूर्यविनायकका प्रेसिडेन्ट लायन विष्णुभक्त मारिखूले भने, “लायन्सका सर्बकालिन सिपाही भएकाले निर्वाचन भइहालेमा पनि उनको जितको सम्भाबना अत्याधिक छ।“ उनले आफूहरुको समर्थन पनि प्रजापतिलाई नै भएकाले लायन मतदाताहरु सँग उनले उनको पक्षमा मत मागे ।

‘तेस्रो महाधिवेशनमा लायन्स क्लब अफ भक्तपुर अरनिको क्लबका चार्टर सदस्य सर्वकालिन समाजसेवक प्रजापतिलाई मतका लागि म लगायत हामी पनि सवै मतदाताहरुसँग अनुरोध गर्दछौं, लायन्स क्लब अफ भक्तपुर अरनिकोका क्लव प्रेसिडेन्ट लायन रत्नप्रसाद प्रजापतिको अनुरोध छ ।

लायन्स अन्तर्राष्ट्रिय विश्वव्यापी सेवा गर्ने बिश्वकै ठूलो सेवामूलक संस्था हो । व्यवस्था अनुसार लायन डिष्ट्रक्ट ३२५ ले सम्पूर्ण देशभरको लायनलाई जनाउँछ । त्यसमा पनि डिष्ट्रिक्ट जी ले काठमाडौं, भक्तपुर, बनेपा, धुलिखेल, पनौती, सिन्धुली, रामेछाप, ओखलढुंगा तथा खोटाङका विभिन्न क्षेत्रका लायन्सहरु रहेको डिष्ट्रिक्ट हो । यसमा ती क्षेत्रका क्लबहरुमा रहेका लायन्सहरु मतदाता रहने व्यवस्था रहेको छ । बैशाख १३ गते यसैको महाधिवेशन हुन लागेको हो ।

महाधिवेशन काठमाडौंको राष्ट्रिय सभागृहमा हुने जनाइएको छ । उनी सँगसंगै लायन्स अन्तर र्‍ाष्ट्रियको इन्टरनेशल डाईरेक्टर ईन्डोर्सी पदका लागि काठमाडौ डिल्लीबजारका पाष्ट डिष्ट्रिक्ट गभर्नर लायन सुदर्शनधर प्रधानांङ्गले पनि उम्मेदबारी दिएका छन्

# निडसेवाको आयोजनामा आर्चरी खेल



काठमाडौं । राष्ट्रिय आदिवासी जनजाति अपाङ्ग स्व-रोजगार महिला संघ नेपालको आयोजनामा आर्चरी (धनुवाण) खेल कार्यक्रमको आयोजना गरेको छ । सोमबार ललितपुरस्थित द बेस्ट आर्चरीको सभाहलमा एक कार्यक्रमको आयोजना गरि अपांगता भएका व्यक्तिहरुको खेल क्षेत्रमा सहयोग पुर्‍याउने उद्देश्यले आर्चरी खेलको विषयमा जानकारी सहित खेल खेलाएको थियो । ११५ औं अन्तराष्ट्रिय महिला दिवसको अवसरमा आयोजित उक्त खेलमा अपांगता भएका युवावर्गहरुको सहभागिता रहेको थियो । उक्त कार्यक्रमको उद्घाटन नेपाल पाराओलम्पिक कमिटि नेपालकी अध्यक्ष राधा घलेले धनुवाण हानेर गरेको थियो ।

पिएच इन्टरनेशनलको सहयोगमा नेपालमा पहिलोपटक पारा आर्चरी कार्यक्रमको आयोजना भएको हो । सो अवसरमा उनले कार्यक्रमलाई संबोधन गर्दै महिलाहरुको सशक्तिकरण सोचेजस्तो नभएको बताए । २१ औं सताब्दीमा पुग्दा व्यवस्था परिवर्तन भएपनि अवस्था परिवर्तन हुन नसकेको भनाई राख्दै उनले खेलको माध्यमबाट पनि आफ्नो भविष्य बनाउन सकिने बताए । अपांगता भएका व्यक्तिहरुलाई खेल क्षेत्रमा सक्रिय भएर लाग्न सके राम्रो भविष्य बनाउन सकिने धारणा व्यक्त गरे । अध्यक्ष घलेले राष्ट्रिय तथा अन्तराष्ट्रिय स्तरमा पनि प्रतिस्पर्धा गर्न सकिने हिसाबबाट तयारी गर्न समेत सुझाव दिए ।

कार्यक्रमका अध्यक्ष तथा निडसेवा नेपालकी अध्यक्ष गंगा छन्त्याल नयाँ स्थापित राष्ट्रिय आदिवासी जनजाति अपाङ्ग स्व-रोजगार महिला संघ नेपाल स्व-रोजगार गरेर बसेका अपांगता भएका महिलाहरुको उत्थान साथै खेल माध्यमबाट पनि उजागर गर्ने उद्देश्यले कार्यक्रमको आयोजना गरेको बताए । उनले निडसेवाले संस्था स्थापना पछिको पहिलो कार्यक्रम नै खेलकुदसंग केन्द्रीत गरेर आयोजना गरेकोले आगामी दिनमा अपांगता भएका व्यक्ति र आदिवासी जनजाति अपांगता महिलाहरुको क्षेत्रमा नयाँ कार्यक्रमहरुको आयोजना गर्दै जाने जानकारी दिए ।

कार्यक्रममा राष्ट्रिय खेलकुद परिषद्का सदस्य तथा तोकान्दो महासंघका अध्यक्ष नन्द बस्याल, नेपाल आदिवासी जनजाति अपांग संघका अध्यक्ष खड्ग सारुमगर, राष्ट्रिय आदिवासी जनजाति अपांग महिला संघ नेपालकी अध्यक्ष जमुना तामाङ, बेस्ट आर्चरीका संचालक तथा प्रशिक्षक नबिन श्रेष्ठ, ह्विलचेयर क्रिकेट एसोशियसनका अध्यक्ष टिसुलट्रिम शेर्पा, वुईवुईनकी अध्यक्ष सामान्ता थापा मगरलगायतले अन्तराष्ट्रिय श्रमिक महिला दिवसको शुभकामना दिदै परम्पारगत धनुषवाण खेलको प्रबर्धनल खेल क्षेत्रमा थप नयाँ कदमहरु चाल्ने बताए ।

# भक्तपुरमा रहेका धार्मिक महत्वका पुखुःहरु

भक्तपुर । उपत्यकालगायतका नेवा वस्तीहरुमा पानीको स्रोतका लागि ठाउँ ठाउँमा पोखरीहरु निर्माण गरिएको पाइन्छ । उपत्यकाको काठमाडौं र ललितपुरमा यस्ता पानीका स्रोतका लागि बनाइएका पोखरीहरु लोप हुने क्रम तीव्र भएको छ। तर भक्तपुर नगरपालिका भित्र नगरपालिका र स्थानीयको सहभागितामा लोप हुन थालेका पोखरीहरु पनि पुनःनिर्माण गर्दै आएको छ। नेवा समुदायमा पोखरी बारे किबंदन्तीसमेत प्रचलनमा रहेको छ । यस्तै भक्तपुरको वडा नं ५ स्थित चुपिंघाटा काँल्हाचा पुखु (पोखरी)मा नुहाए घाउ खटिरा निको हुने जनविश्वास छ। स्थानीय ७४ वर्षिय बुद्धिलाल सुवालका अनुसार घरघरमा धारा नभएको समयमा गाहिटी, तमारी, खँला र आर्दशका स्थानीयहरु काँल्हाचा पुखुःमा स्नान गर्ने, मुख धुने, तपर्ण दिने, देवीदेवतालाई जल चढाई चम्पकेश्वर महादेवको दर्शन गर्ने गर्दछ।

भक्तपुर औद्योगिक क्षेत्रको दक्षिणतर्फ इन्द्रायणी पीठ नजिकै रहेको प्राचिन धल्चा पुखुः(कालदह पोखरी)मा स्नान गर्नाले गोसाईकुण्डमा स्नान गरे सरह पुण्य प्राप्त हुने धार्मिक जनविश्वास रहेको छ । गोसाईकुण्डको प्रतिक मानिने धल्चा पुखुःमा स्नान गरी त्यहाँको महादेवलाई जल चढाउनाले शिर कम्पन हुने र छाला सम्बन्धी रोगको निवारण हुने धार्मिक मान्यता रहेको छ। यहाँ जनै पूर्णिमाको दिन ठुलो मेला लाग्छ।

यसैगरी भक्तपुरको ख्वप लायक्‌ (दरवार स्क्वायर) भित्र रहेको दुमाज पुखुःमा आईतबार र बिहिबार बच्चाहरुलाई नुहाई दिए वा मुख धुवाई दिएमा रुन्चे लागेको, पेट दुःखेको निको हुने धार्मिक विश्वास छ । यो पुखुःको पानीले दुमाजु परिसर सरसफाईका लागि दैनिक प्रयोग गर्ने परम्परा छ।

पुखुःहरुको शहर भनेर चिनिने भक्तपुर नगरका काँल्हाचा पुखुः, धल्चा पुखुः र दुमाजु पुखुः मात्र होइन अधिकांश पुखुःहरु कुनै न कुनै धार्मिक एवम् साँस्कृतिक एवम् रोगको उपचारसँग सम्बन्धीत रहेको छ। त्यसकारण नगरका चार दर्जन पुखुः मध्ये करिब दुई दर्जन पुखुः धार्मिक तथा साँस्कृतिक रुपमा अत्यन्त महत्वपुर्ण मानिएको छ । भक्तपुरमा धार्मिक तथा साँस्कृतिक आस्था रहेका, इतिहास बोकेका, रोग निवारणका लागि बनाएका, शहरको शोभा एवम् सुन्दरता बढाउन, कमलको फुल उत्पादन, मानविय जीवनमा कठिन समयमा मनलाई शान्ति पार्नुका साथै विपद् लगायतमा आकस्मिक प्रयोगका लागि निर्मित अति सुन्दर मनोमोहक पुखुःहरु छन ।

धार्मिक तथा साँस्कृतिक महत्व झल्काउनुका साथै राष्ट्रहितको लागि पुखुःहरु निर्माण गरेको पुरातत्वविद, ईतिहास तथा संस्कृतिविद् प्रा.डा पुरुषोत्तम लोचन श्रेष्ठ बताउछन् । विषेशगरी टाढा टाढाका तीर्थ यात्रामा गई स्नान गर्न जान नसक्ने असहाय अशक्तलाई आफ्नै ठाउँमा स्नान गराई दर्शन गर्न सजिलो बनाउन रहेको उनको भनाई छ । यस्तै पुखुःहरु मध्ये एक हो भक्तपुर नगरपालिका-१, दुधपाटीमा अवस्थित सिद्ध पोखरी । स्थानीयमा तः पुखुःले परिचित सिद्धपोखरी दिउँसो आन्तरिक र बाह्य पर्यटकको आकर्षक गन्तव्यको रुपमा विकास भएपनि बिहान स्थानीय बासिन्दाहरुको धार्मिक तिर्थस्थलको रुपमा रहेको छ । स्थानीय बृद्धबृद्धा बिहानै पोखरीमा आई मुख धुने र पोखरीको जल त्यहाँको महादेवलगायत देवीदेवतालाई चढाई दर्शन गर्ने परम्परा आज पर्यन्त रहेको स्थानीय ६५ वर्षिय विष्णुप्रसाद खत्रीले बताउछन ।

सिद्धपोखरी धार्मिक तथा साँस्कृतिक महत्वले मात्र नभई ईतिहास बोकेको लौकिक वास्तुकलाको अनुपम उदाहरण बोकेको पुखुःको रुपमा परिचित छ। यो पुखुःको पुर्वपट्टि नेपालको सर्ब प्राचिन बराह र गणेशको मुर्ति रहेको छ। धार्मिक समन्वय र सदभावको अनुपम उदाहरण स्वरुप शिव लिङ्ग र चैत्य छ। चैत्य लिच्छवीकालिन मानिएको छ।

प्रा.डा श्रेष्ठका अनुसार वास्तुतन्त्र विधि अनुरुप सिद्ध तान्त्रिक युगमा निर्माण गरेको विशाल पुखुः भएकाले यसलाई सिद्ध पुखुः भनि नामाकरण गरिएको हो । नेपाल सम्वत २३८ तिर भक्तपुरलाई राजधानी नगरको रुपमा स्थापित गर्ने त्रिपुर राजदरबार राजधानीकै मध्यभागमा बनाउने, नगरलाई अनुपम कलाकृतिले सजाउने कार्य राजा आनन्ददेवको पालामा भएको थियो । सिद्धपोखरी त्यो भन्दा केही समय पुर्व आनन्ददेवको दाजु युवराज ईन्द्रदेवले निर्माण गर्न लगाएको ईतिहासमा उल्लेख छ।

लोकमान्यता अनुसार देवराज ईन्द्रले स्नान गरेको दहको प्रतिकको रुपमा लिने भएकाले यस दहलाई ईन्द्रदह पनि भन्ने गरिएको पाइन्छ । ईन्द्रदह परिसरमा लिच्छविकालिनदेखि मल्लकालसम्मका शैव, शक्ति, बौद्ध, वैष्णव, सम्प्रदायका देवी देवताका मूर्तिहरु रहेका छन् । त्यहाँ रहेको शिवलिङ्गमा जल चढाई पिएमा घाँटी दुःखेको रोग निको हुन्छ भन्ने जनविश्वास रही आएको छ।

ईन्द्रजात्रामा येँन्याँ पुन्हीको पुर्व सन्ध्यामा ईन्द्रायणी देवीको खटजात्रा गरी ईन्द्रदहको पश्चिम तिर देवीलाई विरामान गर्ने परम्परा छ। भोलीपल्ट पुन्हीको दिन दहमा स्नान गरी ईन्द्रायणी देवीको पुजाआराधना गरे ठूलो पूण्य प्राप्त हुनुका साथै पारिवारिक सुःख समृद्धि मिल्ने जनविश्वास रहेको छ । ईन्द्रदहमा वासुकी नागको समेत बसोबास रहेको विश्वास गरिन्छ । त्यसैले पानी नपरेर रोपाई ढिला भएको बेला भक्तपुरका स्थानीय बासिन्दा ईन्द्रदहमा गई तान्त्रिक विधिद्धारा वासुकी नागको पुजा गरी हरहर महादेव पानी दे, अलिकति होइन धेरै दे भनेर पानी माग्ने प्रचलन छ।

भक्तपुरमा ईन्द्रजात्रामा निकाल्ने तीन दिने याँ मता(आकाश दिप) नगर परिक्रमा पछि पुखुःहरुमा परिक्रमा गराई जात्रा सम्पन्न गर्ने चलन अहिलेसम्म छ। पहिलो दिनको याँःमता कमलविनायकको यातु बहारे (कमलपोखरी)मा परिक्रमा गरी सम्पन्न गर्छ। दोस्रो दिनको याँःमता झौखेलको मुगथौ पुखुःमा परिक्रमा गरी सम्पन्न गर्छ। तस्रो दिनको याँःमता सिद्धपोखरीमा परिक्रमा गराई सम्पन्न गर्छ।

त्यसैगरी हरेक वर्ष माघ १ गते भक्तपुरमा मनाईने सम्यक महादानमा द्विपंकर बुद्धलाई चढाउने तिलभात इताछेंस्थित नःपुखुको पानीले पकाउने चलन छ। नःपुखुः परिसरमा नै सम्यक महादान पर्व मनाईन्छ।

भक्तपुरमा मानव निर्मित विभिन्न सुन्दर पोखरीहरु मध्ये भाज्या पुखुःअति महत्वपुर्ण पुखुः हो । पुखुःको मध्य भागमा शिखर शैलीमा निर्माण गरिएको सुन्दर जलेश्वरको मन्दिर छ। यो पुखुः १२ औं शताब्दीको शक्तिशाली शासक वर्ग भाजु कसःको नाममा निर्माण गरेकाले यसलाई भाज्या पुखुः भनिएको प्रा.डा श्रेष्ठले बताउछन् ।

भक्तपुर नगरपालिका वडा नं. १ सल्लाघारीस्थित रानी पुखुः, कमलविनायकस्थित यातु बहारे पुखुः, सिद्ध पुखुः, भाज्या पुखुःलगायतका पुखुःहरुको डिल वा परिसरमा भक्तपुरका स्थानीय नेवार समूदायको कुलदेवता स्थापित छन। वर्षको एक दिन दिगु पुजा/देवाली पुजा (कुल पुजा)मा ती पोखरीहरुको डिलमा कुल पुजा गरी भोज गर्ने परम्परा आज पनि जिवित रहेको छ।

पुखुः छेउमा कुल देवता स्थापित गर्नुको मुख्य उद्देश्य पुखुःमा रहेको पवित्र जलले कुलदेवताको स्नान गराई दर्शन पुजा गर्नु हो । पुखुःको छेउमा कुलदेवता स्थापित गर्नुको अर्को कारण वर्षको एक पटक भएपनि शहरी सिमाना सुरक्षा के कस्तो छ हेरी देश रक्षाको भावना जगाउनु रहेको श्रेष्ठको कथन रहेको छ।.।चिनकालदेखिका पुखुःहरु जनतालाई धार्मिक, साँस्कृतिक रुपमा मात्र नभएर मानसिक रुपमा पनि शान्ति, आनन्द प्रदान गर्न बनाएको हो । पर्यावरणले मानिसहरुमा कति रोगको निवारण गर्छ भन्ने भक्तपुरको पुखुःहरुले देखाएको छ । त्यसका साथै मानविय जीवनमा कठिन परिस्थिति अनावृष्टि, अनिकाल जस्तो समयमा पानीको प्रयोग गर्न पाओस भनी प्राकृतिक रुपमा जल भण्डारणको रुपमा पनि पुखुःहरु बनाएको हो । जसले गर्दा सिँचाईलगायत आगलागी जस्ता विपदको समयमा आकस्मिक रुपमा ती पुखुःहरुको पानी प्रयोग हुन सकोस् ।

भक्तपुर नगर स्थापना गर्ने लिच्छवी राजा आन्नददेवले वास्तुमय बनाउने क्रममा विभिन्न पुखुःहरु निर्माण गरेका थिए । यससँगै मल्लकालमा पनि धेरै पुखुःहरु बनेको ईतिहासमा उल्लेख छ। धर्म संस्कृतिले धनी भक्तपुरमा कति जात्रा पर्वका लागि नभई नहुने कमलको फुलको लागि समेत पुखुः बनाएको छ। नगरमा कमलविनायकको बाहारे पुखुः, तलेजु भवानीको पुजाको लागि ब्यासीस्थित नार्का बाहारे पुखुः, पलेश्वाँ बाहारे, याताको बाहारे पुखुःहरु कमलको फुलकै लागि निर्माण गरेको इतिहासमा उल्लेख छ।

पानी जीवन भएकाले मानिसको दैनिकीसँग जोडेर नगरको प्रत्येक टोल टोलमा नुहाउन, लुगाकपडा धुन, तरकारी पखाल्न, गाईवस्तुलाई खुवाउन, हातखुट्टा धुन, भाँडा माझ्न, कृषि कर्म गरी घर फर्कने क्रममा औजार धुने कार्यमा पनि पुखुःको उपयोग हुँदैं आएको पाईन्छ। त्यसैगरी माछा पालन गरेर आर्थिक रुपमा सबल बन्नुका साथै बाह्य तथा आन्तरिक पर्यटकको गन्तब्यस्थलको रुपमा विकास गर्न पुखुः बनाएको हो ।

भक्तपुरका पुखुःहरु धार्मिक, साँस्कृतिक र रोग निवारणसँग मात्र जोडिएका छैन । यहाँको पुखुः तत्कालिन समयको विज्ञान प्रविधि र ईञ्जिनियरिङको अनुपम सिपको नमूना पनि रहेको छ । भक्तपुर नगरपालिका वडा नं ८ को खँचा पुखुःमा करिव एक किलोमिटर पश्चिममा रहेको प्रसिद्ध ङतापोल (पाँच तल्ले) मन्दिरको छायाँ स्पष्ट देखिन्छ। यस्तो ईञ्जिनियरिङ प्रविधि प्रयोग भएको पुखुः वास्तवमै उत्कृष्ट ईञ्जिनियरिङ हो ।

पछिल्लो समय अधिकासं पुखुःहरुले भक्तपुर नगरपालिकाको सहयोग र स्थानीयको श्रमदानमा पुनर्जिवन पाएको छ । सिद्धपोखरी, रानी पोखरी, भाज्या पुखुः, कालदह, दुमाजु पुखुः, मंगल कुण्ड, कुमारी पुखुः, गरुडकुण्ड, सँला गणेश पुखुः, नाग पुखुः, नःपुखु जस्ता अति धार्मिक तथा साँस्कृति महत्व रहेको पुखुःहरुले पुनर्जिवन पाइसकेको छ। नगर भित्रका करिब ५० पुखुःमध्ये गलसी पुखुः, नार्का बाहारे, तिलांचा पुखुः, खोर्चा र खोहरे पुखुः मार्कण्डे पुखुः, अलिगचा पुखुःलगायत करिव एक दर्जन पुखुः भने लोप भइसकेका छन।

# नगदेशको लायकू पुनःनिर्माण शुरु

भक्तपुर । मध्यपुर थिमिको नगदेशमा रहेको ऐतिहासिक लायकू (दरवार) को पुनःनिर्माण शुरु भएको छ। मल्लकालमा तत्कालिन प्रशासनिक कार्यस्थलको रुपमा रहेको नगदेश लायकूको सोमवार शिलान्यास सम्पन्न भएको हो।

मध्यपुर थिमि नगरपालिकाको नगरस्तरीय योजना अन्तर्गत लायकूको पुनःनिर्माण शुरु भएको हो। लायकू तीन तल्ले र परम्परागत शैलीमा निर्माण हुने नगर प्रमुख सुरेन्द्र श्रेष्ठले जानकारी दिए। उनले नगरको क्रमागत योजना अन्तर्गत लायकू पुनःनिर्माण हुन लागेको बताए।

लायकू पुनःनिर्माणका लागि यसवर्ष नगरपालिकाले लागत साझेदारी अन्तर्गत ६९ लाख ९७ हजार ४१७ रुपैंया विनियोजन गरेको छ भने स्थानीय जनसहभागिताबाट ५७ हजार ८३९ रुपैंया व्यहोर्ने छ।

उनले ऐतिहासिक एवम् पुरातात्विक महत्वका सम्पदाहरुको प्रचार प्रसार गरी पर्यटन उद्योगको विकाससँगै स्थानीयको आय आर्जन बृद्धि गर्ने लक्ष्य नगरपालिकाको रहेको बताए । उपप्रमुख विजयकृष्ण श्रेष्ठले अस्तित्वको संकटमा रहेको नगदेश स्थित पुरातात्विक एवम् ऐतिहासिक महत्वको लायकूको पुनःनिर्माणले नगदेश क्षेत्रकै महत्व बढ्ने बताउँदै नगरभित्रका अमुल्य सम्पदाहरुको निर्माण एवम् पुनःस्थापनको कार्य निरन्तर जारी रहने स्पष्ट पारे।

लायकू पुनःनिर्माणका लागि स्थानीय बासिन्दाको भेलाले भाइजन बादेको अध्यक्षतामा उपभोक्ता समिति गठन गरेको थियो। समितिले गत फागुन २५ गते नगरपालिकासँग सम्झौता गरी कार्य शुरु गरेको र आगामी २०८२ असार १० गते सम्पन्न गर्ने लक्ष्य रहेको जानकारी दिए।

# अल-नासर एसियन च्याम्पियन्स लिग एलिटको क्वाटरफाइनलमा

एजेन्सी - झोन दुरानको २ गोल र क्रिस्टियानो रोनाल्डोले पेनाल्टीमा गोल गरेपछि सोमबार साउदी प्रो लिग टोली अल-नासर एसियन च्याम्पियन्स लिग एलिटको क्वाटरफाइनलमा पुगेको छ । अल-नासरले इरानी क्लब एस्तेग्लाललाई ३-० ले पराजित गर्यो । अर्को खेलमा कतारी क्लब अल-सद्दले अल-वसललाई पराजित गऱ्यो।

अल-सद्दको दोहामा भएको ३-१ को जितमा अक्राम अफिफले महत्वपूर्ण भूमिका खेले, जसले फेलिक्स सान्चेजको टोलीलाई ४-२ को समग्र जित दिलाए र संयुक्त अरब इमिरेट्सको टोलीलाई पराजित गरे ।

अल-नासर र क्लब एस्तेग्लालबिच तेहरानमा भएको पहिलो लेग गोलरहित बराबरीमा सकिएको थियो। यो जितले स्टेफानो पिओलीको टोलीलाई क्वार्टर-फाइनलमा पुर्यायो । खेलको नवौं मिनेटमा दुरानले अल-नासरलाई अग्रता दिलाए। एस्तेग्लालका गोलकिपर सेयेद होसेइन होसेइनीले बल गुमाएपछि कोलम्बियाली खेलाडीले झन्डै २५ यार्ड टाढाबाट गोल गरे ।

अल नासरले पेनाल्टीमार्फत अग्रता दोब्बर बनायो । रोनाल्डोले २७औं मिनेटमा सहज आत्मविश्वासका साथ पेनाल्टीमा गोल गरे । मोहम्मद निकनाफ्सले साडियो मानेलाई खराब ट्याकल गरेपछि अल नासरलाई पेनाल्टी दिइएको थियो ।

पहिलो हाफको अन्त्यतिर मेहरान अहमदी दोहोरो पहेँलो कार्ड पाएर मैदान बाहिरिएपछि एस्तेग्लालको अवस्था जटिल बनेको थियो । उनले मोहम्मद अल-फातिललाई फाउल हान्दा रेड कार्डको सामना गर्नुपऱ्यो । ८४औं मिनेटमा दुरानले अर्को गोल गर्दै टोलीको अन्तिम आठको यात्रा सहज बनाएका थिए ।

# टुसाल र मध्यपुरको बराबरी

काठमाडौं । सहिद स्मारक बी डिभिजन लिगमा टुसाल युथ क्लब र मध्यपुर युथ एसोसिएसनबीचको खेल १-१ गोलको बराबरीमा सकिएको छ । एन्फा कम्प्लेक्समा भएको पहिलो खेलमा बराबरी नतिजासँगै दुवैले १/१ अंक बाँडेका छन् । खेलको ४१ औं मिनेटमा मध्यपुरले पहिले अग्रता बनायो । सन्तोष गोङ्बाको हेडेरमा गोल गरे । पहिलो हाफ १-० को नतिजामा सकियो ।

दोस्रो हाफमा टुसाल खेलमा फर्कन सफल रहयो । ६६औं मिनेटमा अनमार्क पोजिसनमा रहेका विनोद नेम्वाङले क्लोज रेन्जबाट गोल गरे । यो सँगै खेल १-१ को बराबरीमा टुँगियो । यसपछि खेलमा थप गोल हुन सकेन । खेल बराबरी कै नतिजामा सकियो ।

दुवै टोलीले जितबाट लिगको सुरुवात गर्न सकेनन् ।

# एम्बाप्पे र जुनियरको गोलमा रियलको जित

एजेन्सी । स्पेनिस ला लिगाको आइतबार भएको खेलमा रियल म्याड्रिडले रायो भल्कानोलाई २-१ ले हराएको छ । जितपछि रियल र बार्सिलोनाको अंक बराबर भएको छ । एक दिन अघि बार्सिलोनाको ओसासुनासँगको निर्धारित खेल टिमका पुराना डाक्टरको निधनले स्थगित भएको थियो ।

आइतबारको खेलमा ३० औं मिनेटमा केलिएन एम्बाप्पेको गोलमा रियल म्याड्रिडले अग्रता लिएको थियो । त्यसको चार मिनेटपछि नै भिन्सियर जुनियरले अर्को गोल गरे ।

पहिलो हाफको इन्जुरी समयमा भल्कानोको पेड्रो डियाजको प्रहार क्रस बारको भित्र लागेर गोलमा परिणत भएको थियो ।

एट्लेटिको म्याड्रिड भने आइतबार गेटाफेसँग अप्रत्याशित रूपमा पराजित भयो । अलेक्जेन्डर सोरलोथको पेनाल्टी गोलमा पहिलो हाफमा एट्लेटिकोले अग्रता लिए पनि अन्तिम दुई मिनेटमा गेटाफेका माउरा आराम्बारीले दुई गोल गरेका थिए ।

स्पेनिस लिगका अन्य खेलमा एथलेटिक क्लब र मार्लोका बीच ११ गोलको बराबरी भयो । रियल बेटिसले लास पल्मासलाई १-० ले हरायो । सेभियाले रियल सोसिडाडलाई १-० ले हरायो ।

तालिकामा बार्सिलोना र रियल म्याड्रिडको समान ५७ अंक छ । बार्सिलोनाले एक खेल कम खेलेको छ । एट्लेटिको म्याड्रिडको ५६ तथा एथलेटिक क्लबको ४९ अंक छ ।

## राजावादीको..

कानून तथा लोकतन्त्रको विरोधमा छैन । हामीलाई अहिलेको दलको कार्यशैली मन परेको छैन । तर, पनि हामी अहिलेको व्यवस्थाविरोधी होइनौं ।' अहिलेको सरकारले डेलिभरी दिएन भन्ने आक्रोश भएपनि पूर्वराजाको कार्यकाल सुखद् नभएको कार्यवाहक प्रवक्ता झा बताउँछन् ।

राजाको समयमा पनि उत्तिकै बेथिति र भद्रगोल रहेको भन्दै उनले कमजोरीलाई नस्वीकारेको बताए । 'आफ्ना लागि सबै अनुकूलता हुँदा पनि पूर्वराजाले न राम्रो काम गरे, न पहिले भएको गलत कुरालाई स्वीकारे,' झाले भने, 'पूर्वराजाको सबै कुरा उत्कृष्ट थिए भनेर रवीन्द्र मिश्रले भनिरहेका छन्, तर पुरानो इतिहासलाई हेर्दा, अनि अहिलेको टीम र अपिल हेर्दा पूर्वराजालाई हामीले सिरियसली लिएका छैनौं ।'

पूर्वराजा र राजावादीको सक्रियतापछि सबैभन्दा बढी प्रतिक्रिया जनाउनेमा माओवादी केन्द्र देखिएको छ । महोत्तरीबाट माओवादी अध्यक्ष प्रचण्डले पूर्वराजालाई 'इतिहास पछाडि फर्किंदैन, राजतन्त्र फर्काउने सपना नदेख्नू' भनेर चेतावनी दिएका थिए । राजावादीको सक्रियतापछि प्रमुख प्रतिपक्षी दल माओवादीले मधेशको हुलाकी राजमार्गमा गरिरहेको ' जनतासँग माओवादी' अभियान स्थगित गरेको छ ।

अभियान स्थगित गरेको दिन शनिबार रौतहटबाट माओवादी अध्यक्ष प्रचण्डले पूर्वराजाले मूर्खता देखाए अहिले पाएको सेवासुविधा पनि खोस्ने चेतावनी दिएका थिए । 'मैले पहिले पनि भनेको थिएँ, ज्ञानेन्द्रले विगतमा पनि मुर्खता गरेका हुन् । फेरि पनि अर्को मुर्खता गरे पाएको पनि सबै सखाप नपारुन भन्ने चाहन्छु', प्रचण्डले भनेका थिए, ' कारबाही गर्नुको सट्टा आरामसँग बस्न दिएर हामी उदार बनेका थियौं । जबर्जस्ती गर्न खोजिए नेपाली जनतालाई मान्य हुँदैन । पूर्वराजालाई राजनीति गर्न मन लागेको हो भने पार्टी खोले हुन्छ ।'

अभियान स्थगित गरेपछि माओवादीले सबै शीर्ष नेतालाई काठमाडौं उतारेको छ । शीर्ष नेताहरू काठमाडौं फर्किएर बैठक गरेका छन् । राजावादीले दबाब बढाइरहेका बेला माओवादीले पनि आफूलाई परिवर्तनकोवाहकको रूपमा उभ्याउने नीति लिएको छ । मुद्दाका रूपमा गणतन्त्रको पक्षमा खरो उत्रिए पनि सरकारलाई थप रक्षात्मक बनाउने नीतिमा माओवादी देखिएको छ । 'हामीले अरू कुराभन्दा पनि सदन र प्रतिपक्षीलाई बलियो बनाउन खोजेका हौं । राजावादीको विरोधतिर धेरै ध्यान दिएका छैनौं । हाम्रो अभियान स्थगित हुनुमा राजावादीको विरोधको कुनै साइनो छैन' माओवादी प्रवक्ता अग्निप्रसाद सापकोटाले भने, 'तर, हामीलाई राजतन्त्र फर्किन्छ भन्ने लाग्दैन ।'

त्यस्तै प्रधानमन्त्री ओलीले आइतबार सुदूरपश्चिम प्रदेशसभालाई सम्बोधन गर्ने क्रममा पूर्वराजा ज्ञानेन्द्र शाहविरुद्ध आक्रामक रुपमा प्रस्तुत भए । "अहिले संविधान नमान्ने, लोकतन्त्र नमान्ने, कानून नमान्ने, प्रणाली नमान्ने अनौठो प्रवृत्ति देखा पर्न थालेको छ । अस्ति फागुन ७ गतेको लागि अघिल्लै दिन बेलुका ६ गते नै पूर्वराजा ज्ञानेन्द्र शाहले गरेको सम्वोधन सुनेर छक्क लाग्यो । संविधानको पनि कुरा गर्नुहुन्न त उहाँ त । कानूनको पनि कुरा गर्नुहुन्न उहाँ । लोकतन्त्रको कुरा गर्नुहुन्न । प्रणालीको कुरा गर्नुहुन्न । प्रक्रियाको कुरा गर्नुहुन्न ।

'मलाई साथ दिनोस्, म आउँछु, देश बचाउँछु' देश के भएको छ ? उहाँहरुका यस्ता अस्थिरताका क्रियाकलापहरुले, अराजक क्रियाकलापहरुले उहाँहरुद्वारा प्रेरित अराजक क्रियाकलापहरुले देश अप्ठ्यारोमा पर्दैछ ।

उहाँलाई सुझाव दिन चाहन्छु- एउटा पूर्वराजाको हैसियतले उहाँले त्यति वर्ष पुस्तौनी सत्ता चलाएको हैसियतले उहाँले देशलाई सभ्य सुसंस्कृत ढंगले लोकतान्त्रिक बाटोमा लोकतान्त्रिक विधिबाट संविधान र कानून अनुसार सञ्चालन गर्नुपर्छ भनेर सिकाउनुपर्ने ठाउँमा के चुनावमा साथ माग्या कि ? भोट माग्या कि ? के मागेको ? मलाई साथ देऊ, म आउँछु ! कहाँ आउने उहाँ ? पोलिटिक्समा आउनोस् न हामी त स्वागत गर्छौं त । अराजनीतिमा आउने कि राजनीतिमा आउने ? राजनीतिमा आउने हो भने यो आर वेलकम । आउनोस् । स्वागत छ ।"

त्यस्तै सुदूरपश्चिम प्रदेश सम्मेलनमा सहभागी हुन जाने क्रममा पत्रकारहरूसँगको कुराकानीमा पूर्वप्रधानमन्त्रीसमेत रहेका सभापति देउवाले पूर्वराजा ज्ञानेन्द्रको शक्ति प्रदर्शनलाई समान्य रुपमा लिएको अभिव्यक्ति दिए । उनले राजतन्त्रको पक्षमा आफूले माहोल नै नदेखेको बताए । राजावादीले आइतबार संघीय राजधानी काठमाडौंमा गरेको प्रदर्शनतर्फ ईंगित गर्दै सोधिएको पत्रकारको प्रश्नको जवाफ दिँदै सभापति देउवाले भने, 'त्यस्तो मैले केही माहोल देखेको छैन ।'

हिजो काठमाडौंमा अद्भूत प्रदर्शन भयो भन्ने हल्ला छ नि ? भन्ने अर्को प्रश्नमा देउवाले केही अद्भूत नभएको पनि जिकिर गरे । 'कहाँ अद्भूत भयो ? केही भएकै छैन नि,' देउवाको भनाइ थियो ।

महामन्त्री गगनकुमार थापाले नेपाली राजनीतिको विषम् परिस्थितिमा कांग्रेसलाई साथ दिएका नागरिकमा देखिएको असन्तुष्टिलाई राजावादीहरूले उपयोग गर्न चाहेको बताए । उनले सशस्त्र विद्रोहका क्रममा माओवादीबाट लखेटिँदा, तत्कालीन राजा ज्ञानेन्द्र शाहले अधिकार खोस्दा र संविधान सभा विघटन हुँदा कांग्रेसलाई साथ दिएका जनतामा देखिएको असन्तुष्टिलाई राजावादीले उपयोग गर्न खोजेको टिप्पणी गरे ।

'नागरिकहरूको यो असन्तुष्टिलाई, यो असन्तुष्टिबाट सिर्जना भएको आक्रोशको आगोलाई प्रयोग गरेर एकथरी जसले यो व्यवस्था आओस् भनेर कहिले चाहेकै थिएन, उनीहरू आगोमा रोटी सेक्न चाहन्छन्,'

## संविधानमा...

गर्नुपर्ने पनि आवश्यकता औंल्याए । पुराना थेउरी रटेर सामाजवाद सजिलो नहुने उनको तर्क छ ।

उनले समाजवादका चरणप्रति सहमती जनाउँदै त्यसका लागि सशस्त्र बिद्रोह आवश्यक नभएको बताए । वर्तमान पुस्ता सशस्त्र बिद्रोहबाट थाकेर बसेको बताउँदै उनले यो पुस्ता सशस्त्र बिद्रोहको पक्षमा नरहेको ठोकुवा गरेका छन् ।

अर्का सहप्राध्यापक डा गुमानसिंह खत्रीले जनवादी क्रान्ति सम्पन्न भएको भन्ने लेखक ढकालको भनाइ प्रति सहमती जनाएपनि भूमिको पुनर्वितरण नगरिकन र सामन्तवादी श्रम सम्बन्ध कायमै रहेसम्म समाजवादी क्रान्तिको चरणमा पुगिएको भन्ने निष्कर्ष सहि हुन नसक्ने बताए ।

डा गुमानसिंह खत्री

देशमा सुदखोर र मिटर ब्याज बिरुद्धको आन्दोलन, सहकारी पिडितहरुको आन्दोलन लगायत जनपक्षीय आन्दोलन उठिरहेको र कम्युनिष्टहरुले त्यसको नेतृत्व गर्न नसकिरहेको प्रति उनले आपत्ति जनाए ।

नेपालका कम्युनिष्ट पार्टीहरु सामाजवाद उन्मुख भन्ने भ्रममा बाचिरहेका भएपनि उनीहरु संसदीय अवसरवादमा चुर्लुम्म डुबेका डा खत्रीको दावी छ । सुधारिएको पंचायत भन्याजस्तै यो सुधारिएको संसदीय व्यवस्था मात्र भएको उनले दावी गरेका छन् ।

यो अवस्थाबाट समाजवादमा पुग्न नसकिने स्पष्ट पार्दै उनले त्यसका लागि बलप्रयोग अत्यावश्यक रहेको उल्लेख गरे । शासक वर्गबाट शासित वर्गमा स्वामित्व र अधिकार सजिलै हस्तान्तरण नहुने उनले बताए । राष्ट्रिय पूजीको बिकास र सामूहिक पुजीको निर्माण बलप्रयोग नगरी नहुने विषय भएका उनको भनाइ छ ।

त्यसैगरी त्रिविकै अर्का प्राध्यापक डाक्टर सूर्यबहादुर थापाले समाजवाद आवश्यक रहेपनि कम्युनिष्ट पार्टीबीच यसको बाटोको विषयलाई लिएर टुटफुट भएको बिचार व्यक्त गरे ।

प्राडा सूर्यबहादुर थापा

लेखक ढकालले बैज्ञानिक समाजवादकै स्कूलिंगबाट समाजवादी क्रान्तिका दुई चरण लेखेको बताउँदै उनले वर्तमान अवस्थामा यसले समाजवादी क्रान्तिका लागि महत्वपूर्ण पूजी थपिएको बताए ।समाजवादका दुई चरण थेसिसका रुपमा अघि बढ्नुपर्नेमा उनले जोड दिएका छन् ।

सो अवसरमा समाजवादी क्रान्तिका दुई चरण पुस्तकका लेखक डिपी ढकालले सनातनी मार्क्सवादी धारामाहरुमा समाजवादको दुई चरण हुन्छ भनेर कसैले पनि नभनेको स्वीकार गर्दै आफू आफ्नो अनुभव र अन्तराष्ट्रिय समाजवादी क्रान्तिको शिक्षाबाट सो निस्कर्षमा पुगेको जानकारी गराए ।

## भक्तपुरमा...

यहाँको तचपालस्थित दत्तात्रय मन्दिर अगाडि रहेको भीमसेन मन्दिरको फल्चामा पुरुष लिङ्गको प्रतीकस्वरुप काठ झुड्याइएको हुन्छ ।

काठको बीचमा रातो कपडामा योनी आकारमा प्वाल परेको हुन्छ । जसमा काठको लिङ्ग छिराएर राखिएको हुन्छ, त्यसलाई हल्लाउँदा काठ कपडामा बाहिरभित्र गर्ने गर्छ । यो लिङ्ग जस्तो देखिने यसको टुप्पोमा थोरै कपास पनि झुण्ड्याइएको छ । यौनसम्पर्क गर्दा विर्यस्खलन भएको जस्तो देखिने गरी प्रतिकका रुपमा टुप्पोमा सेतो कपास झुण्ड्याइ राखिएको चित्र स्पष्ट देख्न सकिन्छ ।

भीमसेन गुठीले फागुन शुक्ल अष्टमीका दिन मन्दिरमा राखिएको तीन हात लामो ३० इञ्च मोटो काठबाट बनेको लिङ्ग र कपडाबाट बनेको योनी झुण्ड्याएर राख्ने परम्परा छ । यसलाई स्थानीयले भीमसेनको लिङ्ग र द्रौपदीको योनीको प्रतिकका रुपमा लिने गरेको बताउँछन् ।

यो चित्र हेर्दा अश्लिलता प्रदर्शन गरेको जस्तो देखिए पनि भक्तपुरका बासिन्दा भने यसलाई धार्मिक मान्यताका रुपमा लिँदै आएका छन् ।

यहाँ बिहानै देखि भीमसेन र काठको लिङ्ग दर्शन गर्न आउने श्रद्धालुको भिड लाग्ने स्थानीयका अनुसार भीमसेनको लिङ्ग दर्शन गरेमा राम्रो हुने र व्यापार बढ्ने विश्वास रहेको बताउछन् । यो लिङ्गको दर्शन गर्न पुरुष मात्र हाइन महिलासमेत फागु पूर्णिमाको दिनसम्म हरेक दिन बिहान त्यहाँ पुग्ने गर्दछन् । स्थानीयवासी त्यहाँ जान्छन्, लिङ्गको दर्शन गर्छन् र भेटी चढाएर फर्किने गर्छन् ।

भक्तपुरका संस्कृतिकर्मी ओम धौभडेल भीमसेनको लिङ्ग र द्रौपदीको योनीको प्रतीकको दर्शन गरे व्यापार बढ्ने विश्वास रहेको बताउछन् । उनले त्यतिबेला पनि यौन क्रियाकलापको आकर्षण थियो, त्यसमाथि वसन्तऋतुमा मानिसको मात्र नभई चराचुरुङ्गी र पशुपक्षीमा पनि कामवासना हुन्छ भन्ने विश्वासका आधारमा भक्तपुरको यो परम्परा परापूर्वकालदेखि नै चल्दै आएको बताउछन् ।

लिङ्गको दर्शन गर्न बिहानै मन्दिर पुगेकी माइली प्रजापतिले पनि यो आफूले थाहा पाएदेखि नै यसरी राख्ने गरेको बताउछन् । परिवारको सबैमा राम्रो हुन्छ भनेर भेटी चढाएर दर्शन गरेको उनी बताउछन् । उनले भनिन्, "यसरी ढोग्दा सन्तानको सुख र दीर्घायु हुन्छ भन्ने सुनेको छु, पसल पनि राम्रो चल्छ नी ।" यो यौन समागमको प्रतिक मानिने कलात्मक चिह्न भक्तपुरको होली संस्कृति र जीवनशैलीसँग मात्र नभई प्रजनन स्वास्थ्यसँग पनि जोडिएको स्थानीयको भनाइ छ ।

केही वर्षअघिसम्म यो लिङ्गलाई भीमसेनको पाटीमा बाहिर झुण्ड्याउने गरिन्थ्यो र हरेक दिन बिहान भजन गाउँने गरिन्थ्यो । यसरी बाहिरै झुड्याउँदा महिलालाई हिँड्डुल गर्दा अप्ठ्यारो भएको गुनासो आएपछि केही वर्षयता मन्दिरमा रहेको फल्चा भित्र राख्न थालिएको छ । हाल त्यसलाई मन्दिरको माथिपट्टि पहिलो तलामा झुन्ड्याउने गरिएको छ ।

उक्त मन्दिरमा लिङ्ग हेर्न आउने नेपाली नागरिकसँग १० रुपैयाँ र विदेशीसँग ५० रुपैयाँ शुल्क लिने गरिएको छ । भीमसेन मन्दिरमा यही लिङ्गको संरक्षण गर्दै आएकी पुजारी केशरी कपाली यो लिङ्गको संरक्षण गर्न गाह्रो भएको बताउछिन् । उनको भनाइ छ, गाह्रो भए पनि यो त यहाँको परम्परा हो, बचाइराख्नुपर्छ ।

उनी भन्छन्, "यसको संरक्षणमा कसैले चासो दिएन, यो पर्व चलाउन न त भक्तपुर नगरपालिकाले सहयोग गरेको छ, न गुठी संस्थानले नै । यसको संरक्षणका लागि शुल्क तोके पनि शुल्क तिर्दैनन्, पूजा गरेर ढोगेर पाँच १० रुपैयाँ चढाएर जान्छन्, त्यसैको भरमा कसरी पर्व चलाउनु, परम्परा धान्न नै दिनप्रतिदिन गाह्रो हुँदै गएको छ ।"

यो लिङ्ग हरेक वर्ष संरक्षण गरेर राखेर पर्व चलाउनुपर्ने तर सहयोग भने कतैबाट नआएको गुनासो कपालीले गरिन् । उनी लिङ्ग जोगिए पनि परम्परा भने जोगिएको छैन भन्छिन् । भीमसेनको पार्टीमा गाउने गीत, भीमसेनको लिङ्गलाई बजार डुलाउने परम्परा भने हराउँदै गएको उनी बताउछिन् ।

"भीमसेन देया लज खङ्गलो वानला ल्याँसे, बिस्युवाने स्वायक सो झायला"-अर्थात् "भीमसेनको लिङ्गले मन लोभियोकी, भाग्नु नपर्ने गरी हेर्न आएकी ।" भक्तपुरको दत्तात्रय मन्दिर अगाडिको भीमसेन मन्दिरको पाटीमा प्राय गाउने गरिएको यो गीत हिजोआज सुन्न छाडिएको स्थानीयको भनाइ छ ।

भीमसेन मन्दिरको पार्टीमा बसेर भीमसेन गुठीका गायजुले होली पर्व शुरु भएको दिनदेखि पूर्णिमासम्म यो गीत गाएर होलीको आगमन र बिदाइ गर्ने परम्परा अहिले एक किसिमले भन्नुपर्दा हराइसकेको छ । होली पूर्णिमासम्म सात दिनसम्म भक्तपुरमा चल्ने फागु अर्थात् होली पर्व हेर्न र सङ्गीतमा रमाउन स्थानीय सधैं जम्मा भएर गाउने गीत हराएको स्थानीयको भनाइ छ ।

स्थानीय रामप्रसाद प्रजापति भन्छन्, "अहिले यहाँ होलीमा न गीत गाउँछन्, नत यहाँको होली परम्पराको संरक्षण नै भएको छ, यो परम्परा धान्न पनि निकै गाह्रो भएको छ, कसैले सहयोग गर्दैन, न नगरपालिकाले सहयोग गर्छ, न गुठी संस्थानले, यहाँ चढाएको पाँच, १० रुपैयाँले कसरी परम्परा धान्नु ।"

यो लिङ्गलाई दुई जनाले काँधमा बोकेर इनाचो, बाचुटोल, जैंला, जगाति, ब्रम्हायणी, च्यामासिंह हुँदै, तचपालस्थित दत्तात्रय मन्दिर वरिपरि रहेको घर र पसलमा घुमाउने परम्परा पनि हराउन थालेको छ । यसरी टोलटोलमा ल्याएपछि भीमसेनको लिङ्गका रुपमा दर्शन गर्ने परम्परा छ । घर र पसलमा घुमाएको लिङ्गलाई भक्तजनले स्पर्र्श गरी ढोग्ने र दान दक्षिणा दिने गर्दछन् । यसरी घुमाउने वर्षौंदेखिको परम्परा लोप हुने र संस्कृतिमा विकृति पस्ने चिन्ता यहाँका बासिन्दालाई छ ।

"जीवनमा यौन अनिवार्य आवश्यकता हो, यौन अर्थात् यौनजन्य क्रियाकलाप त सिर्जना नै भएकाले भगवानको पालामा पनि थियो र मान्छेको पालामा पनि छ । यौनको आवश्यकता किराफट्याङ्गादेखि पशुपक्षीमा समेत छ । यौनविनाको जीवन अधुरो हुन्छ ।

भीमसेन मन्दिरमा परापूर्वकालदेखि चल्दै आएको यो परम्पराले यौनको महत्वलाई अझ फराकिलो पारेको छ", स्थानीय मोहन श्रेष्ठ भन्छन् । फागुपूर्णिमाको दिन साँझपख दत्तात्रय मन्दिर अगाडिको भीमसेनको मन्दिरबाट लिङ्ग निकाली एक व्यक्तिले बोकेर ब्रम्हायणी मन्दिरस्थित खोलामा लगेर पखाल्ने र पुनःमन्दिरमा राख्ने परम्परा छ । यसरी मन्दिरबाट खोलासम्म लिङ्ग बोकेर लैजाने व्यक्तिलाई त्यस वर्ष छोरा जन्मन्छ भन्ने जनविश्वास अहिलेसम्म पनि रहेकाले लिङ्ग बोक्न छोरा नहुनेको भीड लाग्ने गर्दछ । लिङ्ग पखालेर भीमसेन मन्दिरमा ल्याएपछि यस वर्षको होली समाप्त हुने गर्दछ ।

भीमसेनको मन्दिरको स्थापना १७औं शताब्दीमा राजा जगतप्रकाश मल्ल निर्माण गरेको इतिहासमा उल्लेख छ । भक्तपुरको मौलिक शैलीको होलीको प्रचलन त्यही समयदेखि भएको अनुमान गरिएको छ । मल्लकालीन समयमा ने.स.७८१ र ७९२ मा लेखिएका होलीसम्बन्धी गीत पाइएका कारणले यसको थप पुष्टि हुने धौभडेल बताउछन् । वसन्त ऋतुको आगमन फागुन महिनादेखि हुने भएको र यो समय यौन ऊर्जाको समय मानिने भएकाले पनि होली पर्वसँग यसको सम्बन्ध रहेको यहाँका संकृतिकर्मीको भनाइ छ ।

## एकसय...

प्रबन्धक सूर्य थपलियाले स्वागत गर्दै चिनियाँ फोटोग्राफरको आगमनले नेपालको पर्यटन प्रवर्द्धनका लागि महत्त्वपूर्ण उपलब्धि भएको बताए । सो अवसरमा स्वागत कार्यक्रममा साङ्गीतिक समूह सुकर्मले आफ्नो प्रस्तुति दिएको थियो ।

नेपाल भ्रमण वर्ष २०२५ तथा नेपाल-चीन कूटनीतिक सम्बन्धको ७०औं वार्षिकोत्सवका अवसरमा कार्यक्रम गरिएको जनाइएको छ । कार्यक्रम नेपालको पर्यटन प्रवर्द्धनका लागि एक महत्त्वपूर्ण अवसर हुने फोरमका संयोजक डा कल्याणराज शर्माले जानकारी दिए ।

चिनियाँ फोटोग्राफरले नेपालका विभिन्न पर्यटकीय, सांस्कृतिक तथा ऐतिहासिकस्थलको भ्रमण गर्दै यहाँको प्राकृतिक सौन्दर्य र सांस्कृतिक सम्पदालाई फोटोमार्फत विश्वभर प्रवर्द्धन गर्नेछन् । उनीहरूले फागुपूर्णिमाका अवसरमा विभिन्न स्थानमा रङ्गमय नेपालको फोटो खिच्ने राष्ट्रिय फोटो पत्रकार समूहका अध्यक्ष प्रदीपराज वन्तले जानकारी दिए ।

चिनियाँ फोटोग्राफरले नेपाल भ्रमण गरेर यहाँको संस्कृति, जीवनशैली तथा परम्परागत सम्पदालाई विश्वव्यापी रूपमा प्रचारप्रसार गर्ने छन् । नेपाल-चीन सम्बन्धलाई सुदृढ बनाउन तथा नेपाल पर्यटनलाई नयाँ उचाइमा पुर्याउन यस्ता कार्यक्रमले विशेष योगदान पुर्याउने विश्वास लिएको छ ।

## थोत्रो...

नेताहरूलाई सेखी देखाएको हो । यो कुनै जनताको लहर होईन् । वुध्दिमान राजनेताहरू नेपालमा छन् जनताले चिन्ह सकेको छैन् । अहिलेका कति नेताहरू स्वार्थमा लागेकोले हो । स्वार्थी नेताहरूलाई पनि जनताले चिन्ह सकेको छैन् । राजा आवश्यक छैन् । जनताले समय खेर फालेको र नेताहरूको विरोध स्वरूप यो असंन्तोष हो । धन्यवाद, २०८१/११/२७ गते

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# मिस नेवा:लाई बधाई तथा शुभकामना दिने समारोहमा हाकुपतासी !

काठमाडौं । मिस नेवा:- ११४५ को उपाधि विजेतासहित प्रतिस्पर्धीहरुले नेवा: समुदायको पहिचान झल्काउने पोशाक हाकुपतासी लगाउनेलाई बढावा दिँदै आएका छन् । गत सोमबार ललितपुर महानगरपालिका- १६ ले मिस नेवा: - ११४५ उपाधिका विजेता प्रलिशा शाक्यको सम्मानमा आयोजना गरेको समारोहमा शाक्य सहित उनका प्रतिस्पर्धीहरु २० जना युवती नयाँ डिजाईनका हाकु पतासी लगाएर आएका थिए ।

सार्वजनिक समारोहमा आउँदा हाकु पतासी लगाएको यो पहिलो पटक भने होइन । मिस नेवा:लाई बधाई तथा शुभकामना दिन, विभिन्न सञ्चारमाध्यममा अन्तरवार्ता दिँदा मिस नेवा: शाक्य सहित फस्ट रनरअप, दोस्रो रनरअपलगायत उपाधि विजेताहरु हाकुपतासीमा सज्जिएको पाइएको छ ।

मिस नेवा:ले नेपाल भाषा, संस्कृतिसंगै मौलिक पोशाकलाई प्रवर्द्धन गरेकोमा प्रशंसा गर्दै वडाअध्यक्ष निर्मलरत्न शाक्यले भने 'नेपाल भाषा, संस्कृति र यसको मौलिकता जर्गेना गर्न मिस नेवा:ले युवापुस्तामा जागरण ल्याउनुपर्दछ ।' स्वदेशी मौलिक हस्तकलाका उत्पादनलाई बढावा दिने, नेवा: समुदायसंगै नेपालको संस्कृति, विशेषतामाथि गौरव गर्ने कार्यलाई प्रवर्द्धन गर्ने भएकोले मिस नेवा:को आयोजना गर्न वडाले सहयोगी भूमिका निर्वाह गरेको वडाअध्यक्ष शाक्यको भनाई रहेको छ ।

सो समारोहमा ललितपुर क्षेत्र नं २ का संघीय सांसद् प्रेमबहादुर महर्जन, वाग्मती प्रदेशका सांसद् रामकृष्ण चित्रकार लगायतले मिस नेवा:को माध्यमबाट किशोरीहरुको प्रतिभा प्रस्फुटन गर्न सकेकोमा सराहना व्यक्त गरेका थिए । हाकुपतासी मात्र नभई त्यसकै झझल्को दिने कालो र रातो रङ्गको समायोजन गरी अनेक डिजाइनमा निकालिएको कुर्ता सलवार, लेंगाहरुको प्रयोग गर्नेहरुको संख्या अहिले बढ्दै गएको छ ।

त्यससंगै ढाकाका पछ्यौरी, चोलो, छिपा सारीलगायत सारीहरु लगाउने क्रम बढीरहेको पाइएको छ। 'यी लुगाहरुमध्ये सहज सुन्दरता र औपचारिक सभा, समारोह लगाउँदा उपयुक्त हुने हिसाबले मिस नेवा:का प्रतिस्पर्धीहरुले हाकुपतासी लगाउने गरेका छन् ।' विगत १८ वर्षदेखि मिस नेवा: प्रतियोगिता सञ्चालन गर्दै आएको नेप्लिज फेसन होमका अध्यक्ष हेमा मानन्धरले भनिन् । त्यस्ता पोशाकले मौलिकता झल्काउनेसंगै त्यसको उत्पादन, बिक्रीवितरणमा टेवा पुऱ्याउने पनि उनको भनाई रहेको छ । नेपालमै बन्ने हाकुपटासी, ढाकाका कपडाहरुको माग राष्ट्रिय रुपमा मात्र नभई अन्तर्राष्ट्रिय रुपमा रहेको पनि मानन्धरले बताईन्।

# 'छावा' ले तोड्यो 'स्त्री २' र 'बाहुबली २' को रेकर्ड

काठमाडौं । विक्की कौशल अभिनित उनको फिल्म छावा गत महिना हलमा रिलिज भएको थियो । त्यसबेलादेखि, यो चलचित्र जतातत्तै छ । फेब्रुअरी १४ मा रिलिज हुने फिल्म 'छावा'मा विक्की कौशलसँग रश्मिका मन्डाना मुख्य भूमिकामा देखिएकी छिन् ।

छावाले बक्स अफिसमा धुम मचाई रहेको छ र चाँडै नै ५०० करोड क्लबमा सामेल हुनेछ । यो फिल्मले तेस्रो हप्तामा श्रद्धा कपूरको स्त्री २ र एसएस राजामौलीको बाहुबली २ लाई पनि उछिनेको छ । छावामा विक्की कौशल छत्रपति शिवाजी महाराजका छोरा छत्रपति संभाजी महाराजको भूमिकामा देखिएका छन् । जबकि अक्षय खन्नाले औरंगजेबको भूमिका निर्वाह गरेका छन् । औरंगजेबको भूमिकामा अक्षयले उत्कृष्ट अभिनय गरेका छन् । एकैचोटि तिनीहरूलाई चिन्न गाह्रो हुनेछ ।

स्त्री २ ले तेस्रो हप्तामा बक्स अफिसमा ७२.८३ करोड रुपैयाँ कमाएको छ । जबकि बाहुबली २ ले हिन्दीमा ६९.७५ करोड रुपैयाँ कमाएको थियो । छावाले यी दुई उत्कृष्ट चलचित्रहरूलाई पछाडि छोडेका छन् । छावाले तेस्रो हप्तामा ८४.९४ करोड कमाएको छ ।

छावा तेस्रो हप्तामा ८४.९४ करोड कमाएर दोस्रो सर्वाधिक कमाई गर्ने फिल्म बनेको छ । अल्लु अर्जुनको पुष्पा २ १०७.७५ करोड रुपैयाँको कलेक्सनका साथ पहिलो नम्बरमा छ ।

छावाको कुल कलेक्शनको कुरा गर्दा, फिल्मले अहिलेसम्म ४९६.९० करोड रुपैयाँ संकलन गरिसकेको छ । यो फिल्म ५०० करोड क्लबमा सामेल हुनेछ । छावाले पनि विश्वव्यापी रूपमा राम्रो सङ्ग्रह बनाएको छ ।

छावा लक्ष्मण उतेकरले निर्देशन गरेका हुन् । फिल्ममा विक्की कौशल, रश्मिका मन्डाना, अक्षय खन्ना, दिव्या दत्ता, आशुतोष राणा, डायना पेन्टीले महत्वपूर्ण भूमिका निर्वाह गरेका छन् ।

# एटलीको फिल्मबाट सलमान आउट, अल्लु अर्जुन इन

काठमाडौं । बलिउड निर्देशक एटली कुमारले आफ्नो आगामी फिल्मबाट बलिउडका सुपरस्टार सलमान खानलाई हटाएका छन् । एटलीले अब सलमान खानको सट्टा फिल्ममा अल्लु अर्जुनलाई लिने भएको भारतीय मिडियाहरुले उल्लेख गरेका छन् । रिपोर्ट अनुसार सलमान खान निर्देशक एटली कुमारको आगामी फिल्ममा देखिने छैनन् । सलमान खानका अघिल्ला फिल्महरूको बक्स अफिसमा खराब प्रदर्शनका कारण एटली कुमारले यो निर्णय लिएको बताइएको छ । निर्देशकले यो फिल्म सलमान खान र रजनीकान्तलाई लिएर बनाउन चाहन्थे तर अब उनले सलमान खानको सट्टा अल्लु अर्जुनलाई फिल्ममा लिने भएका छन् र अर्को अभिनेता खोजिरहेका छन् ।

यो फिल्म सन पिक्चर्सले निर्माण गर्नेछ र यो ६०० करोड रुपैयाँको बजेटमा बन्ने भएको छ । यो एक्सनले भरिपूर्ण फिल्म पुनर्जन्मको विषयमा आधारित हुनेछ । जसमा तीन अभिनेत्रीहरू देखिनेछन् । यो फिल्ममा जान्हवी कपूर पनि काम गर्न सक्ने बताइएको छ, तर जान्हवीको नाम अहिलेसम्म आधिकारिक रूपमा घोषणा गरिएको छैन । फिल्मको छायांकन वर्षको अन्त्यसम्ममा सुरु हुने अपेक्षा गरिएको छ । हाल यस फिल्मको पोस्ट प्रोडक्सनको काम चलिरहेको छ ।

सलमान खानको नयाँ फिल्म सिकंदर इदको अवसरमा रिलिज हुँदैछ। यो फिल्मलाई प्रसिद्ध साउथ निर्देशक ए.आर. मुरुगादोसले निर्देशन गरेका छन् । फिल्ममा रश्मिका मन्डाना, काजल अग्रवाल, सत्यराज, शर्मन जोशी र प्रतीक बब्बर लगायतका कलाकारको अभिनय रहेको छ ।

# नेवा: स्टार खड्गी अनुबन्धित "आमा आज पनि रुन्छिन" फिल्मको शुभ साईत चैत्र १ गते

काठमाडौं । नेपालभाषा चलचित्र, म्यूजिक भिडियो क्षेत्रमा लोकप्रिय कलाकार, निर्देशक, कोरियोग्राफरका साथै डान्सिङ क्वीन नेवा: नायिका आराध्यालक्ष्मी खड्गी अनुबन्धित चलचित्र "आमा आज पनि रुन्छिन" को शुभ साइत हुनेभएको छ । आउँदो चैत्र १ गते काठमाडौंको कोटेश्वरस्थित महादेवस्थानमा विहान ८ बजे उक्त चलचित्रको शुभ साइत कार्यक्रम हुने जानकारी नायिका आराध्यालक्ष्मी खड्गीले दिएकी छिन् ।

नेपाली चलचित्र जगतका लोकप्रिय बरिष्ठ कलाकारहरु सरोज खनाल, गौरी मल्लका साथ आराध्यालक्ष्मी खड्गी बुहारीको भूमिकामा देखिने उक्त "आमा आज पनि रुन्छिन" चलचित्रमा रविन्द्र झा, मुस्कान पौडेल, आशा भूषालका साथ बाल कलाकार आर्यन पौडेल, सामिप्य जंग बुढाथोकी, नवप्रतिभा सुदिप शाह ठकुरी, स्ट्रिोना र विशेष भूमिकामा सुदर्शन बुढाथोकी, दिपा पौडेल एवं अतिथि कलाकारमा लोकप्रिय बरिष्ठ कलाकार देशभक्त खनालको अभिनय रहने जानकारी चलचित्र निर्माण टिमले दिएको छ ।

"संसारभरीका सम्पूर्ण आमाहरुमा समर्पित" भन्ने श्लोगानका साथ ए.आर. प्रोडक्सनको प्रस्तुति चलचित्र "आमा आज पनि रुन्छिन" को निर्माताद्वय गिर्वाण विजय खड्का तथा सेवन्तक खड्का हुन् । यस्तै, उक्त चलचित्रको कथा तथा निर्देशन अशुअशेष गिरीको रहेको छ भने मुख्य सहायक निर्देशनमा रामशरण कोईराला र सहायक निर्देशनमा रोहिनी अग्रवाल तथा निश्चल तामाङको रहने छ ।

यस्तै, चलचित्र "आमा आज पनि रुन्छिन" मा केश विन्यास सञ्जु ढकाल, गीतकार तथा पटकथा गणेश सुवेदी, निर्माण नियन्त्रक डिक बहादुर बुढाथोकी (श्री) र तुलसी प्रसाद चौलागाँईले जिम्मा लिएका छन् । मार्मिक कथानक चलचित्र "आमा आज पनि रुन्छिन" आउँदो दशैंताका प्रदर्शन गर्ने लक्ष्यका साथ निर्माण कार्यलाई तिव्रता दिइएको जनाइएको छ ।

# "लाज शरणम्" हेरेपछि बालेनको प्रतिक्रिया

काठमाडौं । काठमाडौं महानगरपालिकाका मेयर बालेन्द्र शाह (बालेन) ले सीताराम कट्टेल (धुर्मुस)को तारिफ गरेका छन् । प्रदर्शनरत चलचित्र 'लाज शरणम्' हेरेर बालेनले धुर्मुसको खुलेर तारिफ गरेका हुन् । बालेनले सोमबार साँझ दरबारमार्गस्थित क्यूएफएक्स हलमा दोस्रो हप्तामा प्रदर्शन भइरहेको चलचित्र 'लाज शरणम्' हेरेका हुन् ।

"यस्तो डिटेल दिनुभा'छ नि ? कस्तो डिटेल दिया हो ? लास्टै दामी । लास्टै मजा आयो," सिनेमा हेरेपछि बालेनले धुर्मुसको तारिफ गरे । बालेनले धुर्मुसको प्रशंसा गर्दै अँगाल्दै भने, "एकदमै राम्रो काम गर्नुभएको छ । म पनि कलाकार हुँ, हामीलाई कला देखाउन पाए हुन्थ्यो भन्ने चाहना हुन्छ । हेरिरहँदा एकदमै मज्जा आयो ।" बालेन मिडियालाई खबर नगरी चलचित्र हेर्न पुगेका थिए । सिनेमाले हालसम्म कति कलेक्सन गर्‍यो भन्ने निर्माणपक्षले खुलाएको छैन । पहिलो दिन यो चलचित्रले एक करोड १० लाख कलेक्सन गरेको थियो । कुमार कट्टेलको निर्देशनमा बनेको 'लाज शरणम्' धुर्मुस मुख्य भूमिकामा छन् । चलचित्रमा सीताराम कट्टेल, महेश त्रिपाठी, विजय बराल, अर्जुन घिमिरे, सागर लम्साल, हरिष निरौला, अर्पण थापालगायत कलाकार मुख्य भूमिकामा छन् ।

जेपीटी क्रिएसनको ब्यानरमा निर्माण भएको चलचित्रमा नवीन श्रेष्ठ निर्माता छन् । राम नरेश शाह र सिर्जना खड्का सह-निर्माता छन् ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक




वर्ष १८ | अङ्क २९ | ने.सं. ११४५ चिल्लागा पञ्चमी | चैत्र ०६ गते बुधबार, २०८१ | 19 March 2025, Wednesday | पृष्ठ ८ | मूल्य रु १०/-

## राजावादीको तीन धार - सामन्ती अवशेष ब्युँताउने दुस्वप्न !

काठमाडौं । गत हप्ता पूर्व राजा ज्ञानेन्द्र शाहको पोखराबाट काठमाडौं फर्कने क्रममा त्रिभुवन अन्तराष्ट्रिय विमानस्थलमा पूर्व राजाको स्वागतमा उर्लिएको भिडले राजा र राजसंस्था फर्काउने सपना देख्दै आएको राजावादी पार्टीको रुपमा देखिएको राष्ट्रिय प्रजातन्त्र पार्टी निकट नेताहरु हौसिएका छन् । राजतन्त्रको अन्त्यसँगै नेपालमा आएको लोकतान्त्रिक गणतन्त्र र नेपालको संविधान २०७२ लागू भएसँगै सोही संविधान र लोकतान्त्रिक गणतन्त्रप्रति प्रतिबद्धता जनाउँदै राजनीतिमा आएका राजतन्त्रका हिमायती मानिने नेताहरुले राष्ट्रिय प्रजातन्त्र पार्टी नामक राजनीतिक दल स्थापना गर्दै खुल्ला राजनीतमा आएको डेढ दशक पछि पुन राजतन्त्रको सपना देख्दै आम नागरिकलाई रैती बनाउने सामन्ती अवशेष ब्युँताउने दुस्वप्न देख्न थालेको छ । साथै यो नेपालको संविधान विरुद्धको अपराध पनि हो । किनकी देशको मुल कानुन भनेको संविधान हो । संविधानको पालना नगर्नु भनेको राज्य विरुद्धको अपराध पनि हो । संविधानको संशोधन गर्न पनि संसदमा दुई तिहाईको बहुमत चाहिन्छ । तसर्थ



सरकारले संविधान विरुद्ध हुने क्रियाकलापमा रोक लगाउनु आवश्यक छ ।

तर राजतन्त्र फर्काउने अभियानमा लागेका राजावादी दल तथा समूह, एकले अर्कालाई नस्वीकार्ने स्थिति रहेका हुन् । अर्थात्, राजालाई मान्ने, तर एक-अर्कालाई पटक्कै नमान्ने स्थिति उनीहरूको छ । यो अभियानमा राजेन्द्र लिङ्देनको राष्ट्रिय प्रजातन्त्र पार्टी (राप्रपा), कमल थापा नेतृत्वको राष्ट्रिय प्रजातन्त्र पार्टी (नेपाल) र दुर्गा प्रसाईं नेतृत्वको 'राष्ट्र, राष्ट्रियता, धर्म संस्कृति र नागरिक बचाउ महाअभियान नेपाल' छन् । तर, यिनै दल र समूहबीच नै मुद्दाको अगुवाइ कसले गर्ने, मुद्दा के हुने, को पूर्वराजाको विश्वासिलो को बन्ने भन्नेमा विवाद र प्रतिस्पर्धा देखिएको छ ।

गत फागुन ७ मा पूर्वराजाको सन्देशपछि राजावादी समूह र राजनीतिक दल राप्रपाले फागुन २५ मा भव्य स्वागत कार्यक्रमको आयोजना गरेका थिए । यो बीच यी सबै समूह पूर्वराजालाई स्वागत गर्न एयरपोर्ट पुगेका थिए । आ-आफ्नो हिसाबले उपस्थित भए पनि पूर्व तयारीका लागि उनीहरूले एउटा संयुक्त बैठक र आह्वान पनि गरेका थिएनन् । राजा आउनुअगाडि नै राप्रपाका अध्यक्ष लिङ्देन नै स्वागतमा नजाने विषय आएको थियो । अन्तिममा उनी स्वागतका लागि गए । आ-आफ्नो हिसाबले पूर्वराजाको स्वागत गरे पनि उनीहरूबीच हार्दिकता त छैन नै, मुद्दामा समेत समान धारणा छैन । सो कार्यक्रम सोचेभन्दा भव्य र राष्ट्रिय तथा अन्तराष्ट्रिय क्षेत्रमा समेत चर्चा पाउन सफल भएको निश्कर्षमा पुगेका केही राजावादीहरु राजतन्त्र पुनः स्थापना गर्ने अभियानमा लागेको छ ।

२०७९ फागुनमा ज्ञानेन्द्र र पारसलाई सँगै राखेर प्रसाईंले महाअभियानको शुरूआत गरेका थिए । त्यसयता पूर्वराजासँग आफ्नो निकटता बढेको दाबी गर्दै आएका प्रसाईंले राप्रपा नेतालाई बेवास्ता गर्दै आएका छन् । नबोले पनि पूर्व राजाले प्रसाईंले गरेको सो कार्यक्रमलाई महत्त्व दिएका थिए । यसअघि प्रसाई नेकपा एमालेमा आबद्ध थिए । आफ्नो

बाँकी पेज ७ मा

## भक्तपुर अस्पतालमा मन्त्रीसहितको अनुगमन



भक्तपुर । देशभरका प्रदेशस्तरीय अस्पतालमध्ये सर्वोत्कृष्ट घोषित भक्तपुर अस्पतालमा गत शुक्रबार स्वास्थ्य मन्त्री र सचिवसहितको टोलीले छड्के अनुगमन गरेको छ । बागमती प्रदेशका स्वास्थ्य मन्त्री किरण थापा मगर, प्रदेशसभा सदस्य सुरेश श्रेष्ठ, बागमती प्रदेश स्वास्थ्य सचिव डा. सुमित्रा गौतम, भक्तपुर अस्पताल व्यवस्थापन तथा सञ्चालन समितिका अध्यक्ष शशिजङ्ग थापासहितको टोलीले अस्पतालको सेवा सञ्चालनका बारेमा छड्के अनुगमन गरेको हो ।

मन्त्री थापा सहितको टोलीले अस्पतालका ल्याब,

बाँकी पेज ७ मा

## काँग्रेस एमाले प्रतिगामी धारमा मिल्ने खतरा : प्रचण्ड




भक्तपुर । प्रमुख प्रतिपक्षी दल नेकपा (माओवादी केन्द्र) का अध्यक्ष पुष्पकमल दाहाल प्रचण्डले नेपाली राजनीतिको तीन धारमध्ये अग्रगामी धारको नेतृत्व आफ्नो पार्टीले गरेको बताएका छन् । यथास्थितिवादी धारमा रहेका नेपाली काँग्रेस र नेकपा(एमाले) लगायतका दलहरु मौका मिल्नासाथ प्रतिगामी धारमा मिल्ने खतरा रहेको समेत उनले खुलासा गरे ।

शनिवार भक्तपुरको सूर्यविनायकस्थित योयो बैङ्क्वेटमा आयोजित पार्टीको प्रशिक्षण कार्यक्रमलाई सम्बोधन गर्दै अध्यक्ष प्रचण्डले माओवादी केन्द्रकै कारण राजसंस्था ढलेको र माओवादी कमजोर भए यसले टाउको उठाउन सक्ने उल्लेख गरे । त्यतिबेला यथास्थितिवादी धारका काँग्रेस एमाले लगायतका दलले पनि प्रतिगमनलाई साथ् दिनसक्ने खतरा कायम रहेको उनले बताए ।

त्यसैले, माओवादी केन्द्रलाई कमजोर हुने छुट नभएको

बाँकी पेज ७ मा

## मध्यपुर थिमि नगरपालिकाले आफ्नै प्रशासकीय भवन निर्माण गर्दै



भक्तपुर । तत्कालिन पाँच गाउँपालिकाहरु दिव्यश्वरी, बालकुमारी, भिमसेन, नगदेश र बोदेको निलबाराही मिलेर २०५३ सालमा स्थापित मध्यपुर थिमि नगरपालिका स्थापना भएको २७ वर्षपछि आफ्नै प्रशासनिक भवन बन्ने भएको छ । नगरपालिका स्थापनाकालदेखि वडा नं. ६ को पुरानो स्वास्थ्य चौकी भवनबाट सेवा सञ्चालन गरिरहेको नगरपालिकाले वडा नं ५ स्थित जल्खुमा नयाँ भवन निर्माण गर्न लागेको हो ।

नगरपालिकाको प्रस्तावित नयाँ प्रशासनिक भवन निर्माणका लागि बोलपत्र आह्वानसमेत गरेको छ । बोलपत्रमा कम कबोल गर्ने निर्माण व्यवसायीलाई ठेक्का दिइने भएकाले भवनको लागत घट्ने नगर प्रमुख सुरेन्द्र श्रेष्ठले जानकारी दिए ।

करिव ३ रोपनी १३ आना क्षेत्रफलमा निर्माण हुन लागेको नयाँ प्रशासनिक भवन परम्परागत र मौलिक शैलीमा निर्माण हुने र जसमा अत्याधुनिक सुविधा सम्पन्न हुने नगर प्रमुख श्रेष्ठको कथन छ ।

भवन वेसमेन्टसहित ८ तलाको हुनेछ । जहाँ ९५० वर्ग मिटरको वेसमेन्टमा पार्किङको व्यवस्था हुनेछ । भवनमा अत्याधुनिक सुविधा सम्पन्न करिव ५५ जनाको क्षमता भएको कार्यपालिका बैठक कक्ष, १५० जनाको क्षमता भएको मल्टी प्रपोज सभाहल, न्यायपालिकाको इजलाश, मेलमिलाप केन्द्र

बाँकी पेज ७ मा

## राजा समर्थकहरूको रैती हुने रहर

● कुशल बुढा

राजा फर्काउन रातदिन जागराम बस्नेहरूले स्पष्ट बुझ्दा हुन्छ- नागरिकको असन्तुष्टि अब नागरिकबाट राजाको रैती, प्रजा हुन होइन, अग्रगमनका लागि हो । राजसंस्था पुनर्स्थापना गराउँछु भन्नु र विजय शाहीले अकालमा मृत्यु भइसकेकाहरू जीवित पार्ने भ्रम छर्नु उस्तै उस्तै हो ।

सामन्तका अवशेषहरूले २४० वर्षको दासत्व किन बुझ्न सकिरहेका छैनन् ? वीर सहिदहरुको रगतले कोरेको इतिहास हो यो । अनि तिनै वीर सपुतहरुको कोखबाट जन्मिएको गणतन्त्र हो ।

आज जनजातिका छोराछोरी राष्ट्रपति, उपराष्ट्रपति, सभामुख, मन्त्री बनिसक्दा राजेन्द्र लिङ्देन, कमल थापा, दुर्गा प्रसाईं र जुम्लाका ज्ञानबहादर शाहीका कति पुर्खालाई राजा र तिनका सन्तानले गुलाम बनाए ?

राजाका रैतीहरुमा यो चेतना हुन जरुरी छ । शासक र क्रोनिजहरूको हालीमुहालीले जनअसन्तुष्टि चुलिएको मौका पारेर दक्षिणपन्थी तत्वहरु चलमलाउन कोसिस गरिरहेका छन् । सत्तारूढ शक्तिको अकर्मण्यले चुलिएको असन्तुष्टिमा पूर्वराजा ज्ञानेन्द्रले प्रतिक्रान्तिको कोसिस गरिरहेको स्पष्ट देखिन्छ ।

संसारमा कोही पनि राजाले जनताको इच्छाबमोजिम शासन त्यागेका छैनन् । त्यो केवल ठूलो रक्तपातपछि मात्र सम्भव भएको पाइन्छ । फ्रान्सका लुईस चौधौंले 'म नै राज्य हुँ' भन्थे । सन् १७१५ मा जनताले उनको टाउको काटेका थिए । यस्ता धेरै दृष्टान्त छन्, जहाँ जनताले महान सङ्घर्षको बलमा लोकतान्त्रिक व्यवस्था स्थापित गर्दै आएका छन् ।

नेपालको राजनीतिक इतिहासमा गणतन्त्र स्थापना र २४० वर्ष पुरानो राजसंस्थाको अन्त्य एउटा ऐतिहासिक घटना हो । यसले नेपाललाई राजतन्त्रबाट लोकतन्त्रमा रूपान्तरण गरायो । देशको राजनीतिक, सामाजिक र आर्थिक परिदृश्यमा परिवर्तन ल्यायो । यस परिवर्तनका पछाडि धेरै कारण र घटना जिम्मेवार छन् । राजसंस्थाको अन्त्यका केही मुख्य कारण यस्ता थिए ।

जनकांक्षा र लोकतन्त्रको माग

नेपाली जनताले लामो समयदेखि लोकतन्त्र, स्वतन्त्रता र समानताको माग गर्दै आएका थिए । राजा ज्ञानेन्द्रले प्रत्यक्ष शासन थालेपछी जनतामा रोष

बाँकी पेज ४ मा

# कलेज र पदाधिकारीमाथि लगाइएका आरोपहरु आधारहीन : केएसएल




काठमाडौं । काठमाडौं स्कुल अफ लले सामाजिक सञ्जाल मार्फत आफु र आफ्ना पदाधिकारी माथी लगाइएका आरोपहरु तथ्य र आधारहीन रहेको जनाएको छ । कलेजले आइतबार पत्रकार सम्मेलन गरी जारी गरेको विज्ञप्तिमा लगाइएका आरोपहरु आधारहीन मात्रै होइन सामाजिक मर्यादाविरुद्ध समेत रहेको जनाएको हो ।

एउटा व्यक्तिले विना कुनै आधार र तथ्य आफ्ना प्रध्यापकहरु माथि अश्लील गाली गलौच गर्दै विभिन्न अरोपहरु लगाउने र उनैले सामाजिक सञ्जालमार्फत लागएको आरोपका आधारमा सञ्चार माध्यमहरु मार्फत सार्वजनिक भएका समाचार बारे कलेजको गम्भिर ध्यानाकर्षण भएको जनाउदै समाचार लेख्नुअघि कम्तीमा तथ्यहरुको जाच गरिदिन कलेजले आग्रह गरेको छ ।

कलेजबाट भर्खरै पास आउट भएकी एक बिधार्थीले सामाजिक सञ्जाल इन्स्टाग्राम मार्फत काठमाडौं स्कुल अफ लका कार्यकारी निर्देशक तथा प्रध्यापक डा. युवराज संग्रौला लगायत केही प्राध्यापकविरुद्ध धारा प्रवाह गाली गलौज गर्दै विभिन्न आरोप लगाउदै आएको सन्दर्भमा कलेजले पत्रकार सम्मेलन गर्दै त्यो हर्कत नियोजित तथा संगठित योजनाको उपज भएको जनाएको छ ।

घटनाक्रमहरुले निज विधार्थी नभई कलेज र कलेजका पदाधिकारी र तिनका परिवारहरु केही दिनदेखि पिडित रहेको तथ्य तर्फ ध्यानाकर्षण गराउँदै कलेजले भनेको छ : यस्ता सामाजिक मर्यादा बिपिरत र मानवअधिकार बिरोधी गतिबिधि प्रति दःख व्यक्त गर्नुबाहेक हामीसंग कुनै शब्द छैन" । यस घटनाले जुनसुकै व्यक्तीले जुनकुनै अवस्थामा जो माथी पनि आरोप लगाइदिन सक्ने अवस्थाको उजागर गर्दै यसबाट हाम्रो स्थापित सामाजिक मर्यादा र न्याय प्रणालीमाथी गंभिर झापट हानेको समेत कलेजले जनाएको छ ।

सामाजिक सञ्जाल मार्फत कुनै व्यक्तिले झुटा र तथ्यहिन आरोप लगाइएका आधारमा स्थापित सञ्चारका माध्यमले समाचार बनाउने कार्यले दसकौको संघर्षबाट स्थापित यो शैक्षिक संस्था र यहाँका पदाधिकारीको मानमर्दन गर्ने काम भएको कलेजले जनाएको छ । यदि कसैको कुनै गुनासो भए र आरोप भए त्यसको छानविनका लागि राज्यका स्थापित न्याय प्रणालीको साहरा लिनुको साटो हठात व्यक्तिको मानमर्दन हुने गरि सुरु गरिएको मिडिया ट्रायलबाट आफुहरु दुःखी भएको बताउदै कलेजले भनेको छ :यस्तो प्रबृतिले कस्तो समाजको निर्माण होला । सामाजिक सञ्जालबाटै आरोप लगाउने, त्यही बहस गरिने र त्यही फैसला गर्ने यही हर्कतले यो समाजलाई कहाँ पुरयाउला ?

पत्रकार सम्मेलनमा आफ्ना धारणा राख्दै प्राध्यापक डा. युवराज संग्रौलाले आफु जस्तो सुकै अनुसन्धान र छानविनका लागि तयार भएको भएपनि यस घटनाबाट आरोप लगाउने व्यक्ति भन्दा उनका कारण आफुहरु बास्तविक पिडित रहेको बताएका छन् । २५ बर्षको गौरवपूर्ण इतिहास बोकेको काठमडौं स्कुल अफ ल र आफु माथी नियोजित रुपमा षडयन्त्र गरि यस प्रकारको आक्रमण सुरु गरिएको बताउदै डा. संग्रौलाले भन्नुभयो : यस कलेज मार्फत आफुले दसकौ देखि नेपाली समाजको गौरवपूर्ण इतिहास र संस्कारलाई कायम राख्न गरेको प्रयत्नको बदलामा देशलाई राजनीतिक रुपमा मात्रै होइन सास्कृतिक रुपमै बिदेशीको गुलाम बनाउने समूहबाट नियोजित रुपमा आक्रमण गरियो। यद्ववी उठेका सन्दर्भहरुका बारेमा सम्बोधन गर्न स्वतन्त्र र निष्पक्ष छानविन समिति निर्माण गरिसकिएको जनाउदै आबस्यक परे राज्यका अन्य निकायहरुले पनि छानविन गर्न सक्ने डा.संग्रौलाको भनाई थियो । आफुकहाँ अध्ययनरत कुनैपनि आस्था र विश्वासका बिधार्थीलाई कुनै पनि विभेद नगरिएको स्पस्ट गर्दै डा.संग्रौलाले भन्नुभयो : आफु अभिभावक भएकाले उनीहरुलाई सही मार्गनिर्देश गर्नु र राज्यलाई असल नागरिक हस्तान्तरण गर्नु आफ्नो दायित्व भएकाले मैले त्यही गरिरहेको मात्रै हो । आफ्नो र आफ्नो समूहको मेहनतकै कारण राज्यले कानुनी अध्ययनका क्षेत्रमा एउटा अन्तरष्टिय स्तरको संस्था पाएको संग्रौलाले स्मरण गर्नुभयो ।

केही दिन देखि डा संग्रौला र काठमाडौ स्कुल अफ लका पदाधिकारीहरु बिरुद्ध सिलसिलावद्धरुपमा सामाजिक सञ्जाल मार्फत गाली गलौज र मिथ्या आरोप लगाउने गरिएको छ। पटक पटक भिडियो मार्फत बर्बराहटको सैलीमा प्रस्तुत हुने ति छात्राले घरि संग्रौलाको परिवारका प्रत्येक सदस्यले पाँच लाखका दरले रकम दिनुपर्ने नदिए सिध्याइदिने धम्की दिने गरेको देखिन्छ । यौनिक टिप्पणी गर्ने गरेको भनि उनले तथ्य भन्दै सार्वजनिक गरेको बिषय भनेको संग्रौलाले लभ अफयर्समा नपर्न र आफ्नो करिअर तर्फ फोकस हुन भनि बोलिएको बिषयलाई मानिएको छ। आफ्नो अभिभावकले आफ्ना बच्चाहरुलाई र एउटा शिक्षकले आफ्ना बिधार्थीलाई सम्झाउदा भन्ने सामान्य बिषय समेत यौन दुर्व्यवहारको बिषय मान्ने हो भने यहाँ परिवारको अस्तीत्व कहाँ रहला ? सञ्जाल मार्फत खुल्ला बार्गेनिङ गरिरहेकी ती छात्राले संग्रौला बाहेक कलेजका अन्य प्राध्यापकहरुलाई मात्रै होइन आफ्नै हजुरवुवालाई समेत बलत्कारी भएको अमर्यादित टिप्पणी गरेको देखिन्छ ।

# अडान भक्तपुरको सातौ अधिबेशन सम्पन्न




भक्तपुर । नेपाल अडिटर्स एशोसिएसन् भक्तपुरको सातौँ जिल्ला अधिबेशन चैत्र २ गते शनिबार सिबर्ड ईन्टरनेसनल कलेजको सभाहलमा सम्पन्न भएको छ । अडान भक्तपुरका कार्यबाहक अध्यक्ष ज्ञानकृष्ण श्रेष्ठको सभापतित्वमा सम्पन्न्न अधिबेशनको प्रमुख अतिथि केनिद्रय अध्यक्ष बद्रि प्रसाद भट्टराईको प्रमुख अतिथ्यता रहेको थियो ।

अधिबेशनमा बिशिष्ठ अतिथिहरू अडान केन्द्रका तृतीय उपाध्यक्ष, आइक्यान पार्षद झलक मणि लम्साल, आन्तरिक राजश्व कार्यालय भक्तपुरका प्रमुख कर अधिकृत शुभ प्रसाद रिजाल, अडानका केन्द्रिय उपाध्यक्ष एबं उपत्यका इन्चार्ज भोलानाथ पाठकबाट शुभकामना मन्तव्य व्यक्त गरिएको थियो

साथै सो अधिवेशनबाट आगामी ३ बर्षको लागि ज्ञानकृष्ण श्रेष्ठको अध्यक्षतामा ११ सदस्यीय जिल्ला कार्यसमिति निर्बिरोध निर्बाचित गरिएको छ । जसमा उपाध्यक्ष रेविद कुश्मा, सचिब केशवराज पन्त, सह सचिब श्याम प्रसाद मुनकर्मी, कोषाध्यक्ष सुदेश बहादुर श्रेष्ठ, सह कोषाध्यक्ष बद्रि बहादुर खडका रहेका छन भने सदस्यहरूमा त्रमशः रमेश थापा श्रेष्ठ, शैलेश धिमाल, सावित्री धौभडेल र राम बिनोद लम्साल निर्बाचित भएको अध्यक्ष श्रेष्ठले जानकारी दिएका छन् । कार्यक्रमको सहजीकरण जिल्ला समिति सदस्य केशब राज पन्तले गरेको कार्यक्रममा अडान ललितपुरका अध्यक्ष बिश्वदेब श्रेष्ठ, काठमाण्डौ अध्यक्ष पूर्ण बहादुर चन्द, उपत्यका प्रदेश समितिका अध्यक्ष टिकाराम पौडेल, केन्द्रीय सदस्य तथा भक्तपुर इन्चार्ज हीरारत्न बज्राचार्य, महासचिब प्रेम बहादुर श्रेष्ठ, उपाध्यक्ष श्री मिरा श्रेष्ठ, अडान केन्द्रका तृतीय उपाध्यक्ष तथा अइक्यान पार्षद झलक मणि लम्साललगायतको उपस्थित रहेको थियो ।

# नेपालमै पहिलो पटक पर्यटन प्रोजेक्ट सोकेस प्रतियोगिता हुँदै

Next-Gen Tourism, From Field to Future
TOPS
TOURISM PROJECT SHOWCASE
Koshi 2025
15th-17th Baishakh
28th, 29th, 30th, April 2025
Hotel G Ramayana
Kaldhara Chowk, Kathmandu
Event Managed By
Kafals
Venue Partner
RAMAYANA
Engineering Partner
NEPAL ENGINEERS' ASSOCIATION
SOCIETY OF NEPALESE ARCHITECTS
Organized by
alison HOSPITALITY PVT. LTD.
3 Days
1 Grand Showcase
7 Jury Experts
10 Teams || 10 Mentors
50 Participants
Proposed Project Theme Areas
- Adventure Tourism
- Agro-Tourism
- Culinary & Gastronomy Tourism
- Cultural & Heritage Tourism
- Eco & Sustainable Tourism
- Religious & Spiritual Tourism
- Smart City & Rural Tourism
- Sports Tourism
- Water Tourism
- Wellness & Meditation Tourism
- Wildlife & Safari Tourism

काठमाडौं । उद्यमशीलताको क्षेत्रमा नयाँ सोच र नवप्रवर्तकको प्रवर्द्धन गर्ने उद्देश्यले एलिसन हस्पिटालिटी प्रा. लि. ले नेपालमै पहिलो पटक इन्जिनियरिङ अध्ययन गरिरहेका विद्यार्थीहरु बीच पर्यटन प्रोजेक्ट सोकेस प्रतियोगिताको आयोजना गर्दैछ । २०८२ साल वैशाख १५ गते देखी १७ गते सम्म काठमाडौंमा पर्यटन प्रोजेक्ट सोकेस प्रतियोगिता हुने भएको हो ।

नेपालको कुनैपनि युनिभर्सटीबाट सिभिल तथा आर्किटेक्ट अध्ययन गरिरहेका विद्यार्थीले प्रतियोगितामा भाग लिन पाउने छन् । प्रतियोगितामा सामेल हुन चाहने विद्यार्थीहरुले कन्सेप्ट पेपर पेस गर्नु पर्नेछ । उत्कृष्ट १० वटा कन्सेप्ट पेपर छनौट गरी प्रतिस्पर्धामा सहभागी गराईने आयोजक एलिसन हस्पिटालिटीका अध्यक्ष एलिना मगरले बताउनु भयो । सहभागीले निःशुल्क प्रवेश गरी प्रतियोगितामा सामेल हुन पाउने छन् ।

'कोसी प्रदेशको जुनसुकै पर्यटकीयस्थल वा नवस्थललाई आफ्नो प्रोजेक्टको टार्गेट स्थलका रूपमा लिएर भूगोल परिवेशअनुसार पर्यटन लक्षित प्रोजेक्ट निर्माण गर्नुपर्ने हुन्छ । सो प्रोजेक्ट निर्माणका लागि प्रतिस्पर्धीले अनिवार्य स्थलगत अध्ययन गर्नुपर्ने र स्थलगत अध्ययन पश्चात सो प्रोजेक्टको ड्रइङ्ग, थ्री डी, प्रोजेक्टको डमी, प्रोजेक्ट प्रेजेन्टेशन तयार गर्नु पर्दछ ।' प्रतिस्पर्धात्मक प्रतिभा देखाउने यो अवसर विद्यार्थीहरूलाई आफ्नो रचनात्मक सोच प्रस्तुत गर्न तथा व्यावसायिक रुपमा अगाडि बढ्न प्रेरित गर्ने बताइएको छ ।

नेपालको पर्यटन क्षेत्रमा नयाँ आयाम थप्न, नवीन संरचना तथा अवधारणाहरू विकास गर्न, तथा स्थानीय समुदायको उत्थानमा योगदान पुर्याउन प्रतियोगिता महत्वपूर्ण हुने अध्यक्ष मगरले जिकीर गर्नुभयो । विशेष गरी, इन्जिनियरिङ (सिभिल तथा आर्किटेक्चर) विषयका विद्यार्थीहरूका लागि यो उत्कृष्ट अवसर हुनेछ । उनीहरूले आवश्यकतानुसार टीममा मेनेजमेन्ट वा आइटीका विद्यार्थीलाई पनि सामेल गराउन सक्नेछ । टीममा अधिकतम ५ जना हुनुपर्नेछ ।

प्रतियोगिताका प्रमुख उद्देश्य नवीन तथा दिगो पर्यटन संरचना तथा योजना विकास गर्ने, स्थानीय सम्पदाको प्रवर्द्धन गर्ने, पर्यटन व्यवसाय प्रवर्द्धनमा नयाँ उपायहरूको खोजी गरी विद्यार्थीहरूलाई व्यवसायिक स्तरमा अवसर प्रदान गर्ने रहेको छ ।

प्रतिस्पर्धीले तयार गरेका प्रोजेक्ट नव वर्ष सो प्रदर्शनीमा सङ्घीय सरकार, प्रदेश सरकार, स्थनीय निकाय, योजना आयोग, एनआरन, उद्योग वाणिज्य संघ, लगानी बोर्ड, पर्यटन बोर्ड, वित्तीय संस्था, विद्यार्थी लगायतलाई अवलोकनमा निमन्त्रणा गरिनेछ । साथै विद्यार्थीले तयार गरेको प्रोजेक्टलाई लगानीकर्ता सँग जोड्ने पुलको कार्य गरिने बताइएको छ ।प्रतियोगितामा प्रथम हुने टिमलाई नगद एक लाख, द्वितियलाई नगद पचास हजार, तृतियलाई पच्चीस हजार र सहभागी सम्पूर्ण टिमले दश हजार साथै प्रमाणपत्र, एवम् आकर्षक गिफ्ट ह्याम्परहरू पाउनेछन् । प्रतियोगितालाई प्राबिधिक सहयोग नेपाल ईन्जिनियर्स एसोसिएसन र सोसाईटी अफ नेप्लिज आर्किटेक्टले गर्नेछन् । कार्यक्रमको व्यवस्थापन काफल इभेन्टले गर्नेछ ।

# पैसाको भरमा नभई जनताको सहयोगमा महाधिवेशन सभ्य र भव्य रुपमा सम्पन्न

भक्तपुर । भक्तपुर जिल्ला बक्सिङ संघको नियमित भेला एवम् बैठक भक्तपुर नगरपालिकका प्रमुख सुनिल प्रजापतिको प्रमुख आतिथ्यतामा लान्चाफल्चाको वर्गर हाउसमा आइतवार सम्पन्न भयो ।

प्रमुख अतिथि सुनिल प्रजापतिले विदेशीको सहयोगमा पार्टी, संगठन संचालन गरेको भए देश र जनताको भन्दा विदेशीको हितमा काम गर्नुपर्ने बताउँदै नेपाल मजदुर किसान पार्टीको आठौं महाधिवेशन बारे बोल्दै ठूला शासक पार्टीहरुले जस्तै पैसाको भरमा नभई जनताको सहयोगमा महाधिवेशन सभ्य र भव्य सम्पन्न गरेको साथै देश र जनताको हितमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रस्तावहरु पास गरी सम्पन्न गरेको बताए । उनले राम शरण महत विश्व बैंकको कर्मचारी अर्थमन्त्री भएपछि देशको उद्योग धन्दा प्रायः निजिकरण गर्दै लगेर देशलाई परनिर्भर तर्फ धकेलेको साथै युक्रेनले पनि अमेरिकाको आडमा रुससंगको लडाईंले युक्रेनको प्राकृतिक स्रोत तथा खनिज अमेरिकाले हात पार्न खोजेकोबाट पाठ सिक्दै भक्तपुर नगरपालिकाले हालसम्म आत्मनिर्भर भएर नै विकास निर्माण गरेको र २०७२ सालको भुकम्पबाट क्षति भएको सम्पूर्ण सम्पदा, मठमन्दिर, पार्टी पौवा, दरवारको पुन निर्माण जन सहभागितामा सम्पन्न गरेको साथै कोरोनाकालमा जनताको सहयोगमा अक्सिजन प्लान्ट स्थापना गरी सम्पूण नगरबासीहरुलाई निःशुल्क वितरण गरेको कार्यले गर्दा उदाहरणीय नगरपालिकाको रुपमा देशका विभिन्न स्थानीय तहका प्रतिनिधिहरु अध्ययन भ्रमण र भेटघाट गर्न आईरहेको धारणा व्यक्त गरे । उनले खेलाडीहरुले पनि देशको राजनीति बुझेर देशको लागि नै खेल्नु पर्ने र जनताको सेवा गर्नुपर्ने बताए । उनले पार्टीको घोषणापत्र अनुसार यस बर्षको अन्तरनगर जिम्नाइष्टिक प्रतियोगिता आयोजनाले जनताको विश्वास जित्न सफल भएको बताए ।

कार्यक्रममा नेपाल बक्सिङ महासंघका कोषाध्यक्ष गौतम सुजखुले नेमकिपाको आठौं महाधिवेशनले युवा परिचालन र खेलकुद बारे नीति तथा कार्यक्रमहरु बारे जानकारी लिन र युवाहरुलाई असल इमान्दार र देश र जनताको सेवामा समर्पित खेलाडी तयार गर्न साथै खेलकुदबाट देशको नाम अन्तर्राष्ट्रिय रुपमा फैलाउन सकोस भने हेतुले कार्यक्रम गरेको बताए ।

कार्यक्रम भक्तपुर जिल्ला बक्सिङ संघका अध्यक्ष रामकृष्ण प्रजापतिको सभापतित्वमा सम्पन्न कार्यक्रममा उनले बागमति प्रदेश बक्सिङ संघ नविकरण नहुँदा खारेज भएकोले प्रदेश खेलकुद विकास परिषद्, बागमती प्रदेश, हेटौडामा सदस्य सचिव भेटर तदर्थ समिति बनाउन राजनीतिक प्रतिशोध साटेर काम गर्न नहुने आफुले बताएको जानकारी दिए । उनले नेपाल बक्सिङ महासंघ नेपाल ओलम्पिक कमिटीको कारण निलम्बनमा रहेकोले बागमति प्रदेश बक्सिङ संघको तदर्थ समिति बनाउन नमिल्ने भनि सदस्य सचिवले बागमति प्रदेशको बक्सिङ खेलाडी छनौटको लागि रामचन्द्र थापामगर, रामकृष्ण प्रजापति र अनिल प्रसाद दाहालको तीन सदस्यीय प्राविधिक समिति बनाएर काम गर्ने बताएको जानकारी दिए भने कार्यक्रम संचालन सचिव साजन लघु र धन्यवाद तुल्सीराम ग्वाछाले गरेको थियो ।

# बिस्कुट उद्योगको छानामा गुन्द्रुकको “बिस्कुन”



भक्तपुर । मध्यपुर थिमिको निकोसेरास्थित इम्पेरियल फुड्स प्रालिको छानामा गुन्द्रुकको बिस्कुन सुकाइएको छ। केही समयअघिसम्म उद्योग वरपरका बस्तीमा घ्यूसहित बनाउँदै गरेको कुकिजको बास्ना चल्ने गरेको थियो । तर, अहिले गुन्द्रुक मगमगाउन थालेको छ । उद्योगले खाजाका रूपमा कोदोसहितका विभिन्न परिकारका ‘अर्गानिक’ बिस्कुट पनि उत्पादन गर्दै आएको छ ।

पछिल्लो समय उद्योगको छानाभरि रायोका साग र मुलाको सिन्की सुकाइएको देखिन्छ । साग र गुन्द्रुक ओल्टाइपल्टाइ गर्न चार पाँच जना महिला निरन्तर लागि परेको देखिन्छ । उद्योगका सञ्चालक पशुपति भुसाल भन्छन्, ‘विदेशमा रहेका साथीभाइले हाम्रा पुराना चिजवस्तु ‘च्याख्ला, कोदो, मकै, गुन्द्रुक, तिलको छोप, टिमुर, अकबरे खुर्सानी, मास दालसहितका गैँडागुडी पठाइदेऊ’ भन्ने माग भएपछि छानालाई गुद्रुकमय बनाएको हुँ ।’ पुरानो पेसाबाट बाहिरिएको नभई समयअनुरूप पेसा-व्यवसायलाई विविधीकरण गर्ने क्रममा नेपाली गुन्द्रुकको बजारीकरणमा लागेको उनको भनाइ छ ।

अहिले रुचाइएको खानपिनले मानिस पुनः पुरानै युगमा प्रवेश गरेको हो की भन्ने भान भएको छ । विगतमा बाआमा र हजुरबाले खाएको कोदो, गुन्द्रुक, जौ र फापरको पीठोको माग अहिले विदेशमा पनि ाभद्दगुन्द्रुकको माग अधिक छ । गुन्द्रुकको झोल र अचारलाई नेपाली भान्सामा लोकप्रिय परिकारका रुपमा लिने गरिन्छ । पछिल्लो समय चौरासी बेञ्जन थालीमा पनि गुन्द्रुक अनिवार्य मानिएको छ । छिटो झट्पट् तरकारी बनाउन पऱ्यो भने गुन्द्रुक नै खोजिन्छ ।

गन्द्रुकका बारेमा विद्यावारिधी गरेका टीकाबहादुर कार्की मुख्यतः गुन्द्रुक नेपालकै स्थानीय उत्पादन भएको बताउँछन् । यद्यपि, जापान र चीनमा विभिन्न साग तथा युरोपलगायतका मुलुकमा बन्दागोभीमा नुन राखेर नेपाली गुन्द्रुकसँग मिल्दोजुल्दा खाद्यवस्तु उत्पादन हुँदै आएको छ ।

जिब्रोलाई ट्वाक्क छुने अमिलो र स्वादिलो ‘तिउन’ गुन्द्रुक नै हो । नेपाली भान्सामा जाडो होस् वा गर्मी सदाबहार उमालिने तिउन गुन्द्रुक नै हो । नेपालका गाउँबस्तीदेखि शहरका सुपरमार्केटसम्मका पसलमा प्याकिङमा गुन्द्रुक बिक्री हुने गरेको छ । जाडो वा गर्मी, ढिँडो होस् वा भात गुन्द्रुकको झोलसँग ‘सऱ्याप्प’ मुछेर खाँदाको फूर्ती र आनन्द बेग्लै हुन्छ । स्वादको त बयान नै गर्न सकिन्न ।

‘नेपाली गुन्द्रुकमा पाइने अमिलोपन स्वादका हिसाबले अनुपम छ, त्यसकारण पनि गुन्द्रुकको लोकप्रियता बढ्दो छ,’ खाद्य प्रविधि तथा गुण नियन्त्रण विभागका पूर्वमहानिर्देशक कार्की भन्छन् । यस वर्ष काठमाडौं उपत्यकामा रायो साग निकै सस्तो भयो । त्यसो त भक्तपुर आफैंमा मुलुकभर रायो र काउलीलगायत हरिया सागपात प्रशस्त उत्पादन हुने जिल्लाका रुपमा कहलिएको छ । प्रतिकिलो १५ सम्म रायको राम्रो पनि पाइयो ।

उद्योगका संस्थापक भुसाल भन्छन्, ‘महँगोमा उद्योगले केजीको ८० सम्ममा खरिद गरेको थियो । खासगरी रायो, तोरी, सर्स्यूं, काउली, मुला आदिको गुन्द्रुक बनाइन्छ । सागको भाउ नेपाली बजारमा खासै चर्को छैन, सस्तै पाइन्छ । त्यस उद्योगले एक पटकमा एक हजार किलोसम्म साग खरिद गर्दै आएको छ । किसानलाई पनि एकै ठाउँमा आफ्नो उत्पादन दिँदा नै सहज भयो । स्थानीयस्तरबाटै पर्याप्त उपलब्ध भइरहेको छ ।’

गुन्द्रुक बनाउन कम्तीमा पनि १५ देखि २० दिनको प्रक्रिया पूरा गर्नुपर्छ । साग किन्ने, केलाउने, धोइपखाली गर्ने, सीधा घाममा सुकाउने, थिच्ने र फेरि सुकाउने, तौल गर्ने, प्याकिङ गर्ने र माग आएबमोजिम बजारसम्म पुऱ्याउने काम उद्योगले गर्दै आएको छ । देख्दा सामान्य लागे पनि सबै चरण पूरा गर्ने विषय जटिल नै छ । बाहिर पठाउँदा अझ सचेत हुनुपर्छ ।

उद्योग सञ्चालक भुसाल सरसफाइमा विशेष ध्यान पुऱ्याइएको बताउँछन् । ‘यहाँ उत्पादन गरिएको गुन्द्रुकमा शुद्धता र गुणस्तर कायम छ,’ उनले भने । नेपालका सबै जिल्ला र गाउँबस्तीमा गुन्द्रुक बनाइन्छ, पकाइन्छ र मीठो मानेर खाइन्छ ।

गुन्द्रुक सहजरूपमा विदेश निर्यात गर्न सञ्चालक भुसालले सरकारका संयन्त्रसँग कुराकानी गरिरहेका छन् । गुन्द्रुक तयार गर्ने प्रक्रिया केही लामो भएको र त्यसमा खटाउन पर्ने जनशक्तिका कारण लागत मूल्य बढी नै हुने गरेको छ । त्यस उद्योगले दालजन्य गैँडागुडीका अतिरिक्त रायोको गुन्द्रुक र मुलाको सिन्की तयार गर्दै आएको छ ।

प्रारम्भमा एक सय किलो रायोको सागबाट सुरु गरेकामा दैनिक एक हजार पाँच सय किलोसम्म साग खरिद गर्न सफल भएको छ । एक सय किलो रायो सागबाट करिब १० किलो गुन्द्रुक तयार हुने सञ्चालक भुसालको भनाइ छ । तोरीको गुन्द्रुकको विदेशमा ठूलो माग छ । तर काठमाडौं उपत्यकाले त्यो माग धान्न सक्ने अवस्था छैन । सरकारले त्यसका लागि तराई-मधेसका कुनै क्षेत्र विशेषलाई ‘ पकेट’ क्षेत्र घोषणा गर्न आवश्यक देखिएको उनको भनाइ छ ।

उद्योगले आफ्ना उत्पादनको विविधीकरण गर्ने उद्देश्यले शुरू गरेको गुन्द्रुकका लागि अहिले सूर्यविनायक, सानोठिमी र बोडे इलाकाबाट साग सङ्कलन भइरहेको छ । गुन्द्रुकका लागि छिप्पिएको र ठूला पात भएको साग राम्रो मानिन्छ । रायोका साग पनि विभिन्न प्रकारको पाइन्छ । मीठो गुन्द्रुक बनाउने र गुणस्तर कायम गर्ने सवालमा पाका पुराना पुस्ता स्वयम् विषय विज्ञकारूपमा रहेको उद्योगी भुसाल बताउँछन् । उद्योगले उनै पुराना पुस्ताका कामदारलाई प्रशिक्षक बनाएर गुन्द्रुक र सिन्की तयार गरिरहेको छ ।

थकाली भान्सामा गुन्द्रुक अनिवार्य नै मानिन्छ । आलु-गुन्द्रुक, गुन्द्रुक-भट्टमास, तितौरा, गुन्द्रुक बोडी, आँपको चानासँग पनि गुन्द्रुक मिसाएर पकाइन्छ । गुन्द्रुकमा पनि हरियो सागमा पाउने गुण छ । विश्वका कयौं मुलुकले खाद्य परीक्षण गरी गुन्द्रुकलाई खानयोग्य भनेर प्रमाणित गरिसकेको छ ।

कलिलो र छिपिएको साग र निर्धारण गरिएको प्रक्रिया पूरा गरेका आधारमा गुणस्तर हुने गर्छ । भाटभटेनी, मार्ट र अन्य स्टोरमा नमूनाका लागि पठाइसकिएको उनको भनाइ छ । गुन्द्रुक प्रतिकिलो सात सयदेखि एक हजार पर्छ । ‘यसमा काम गर्ने सपनादेखि रहेको छु । त्यो पूरा हुनेमा उत्साहित नै छु । गुन्द्रुकसँग सबै चिजवस्तुमा उत्पादनको लोगो लगाएर गाडीभरि बजारमा पठाउने कोसिसमा छु । त्यसका लागि रातदिन खटिरहेको छु,’ व्यवसायी शान्ता अधिकारी भन्छन् ।

कोरोनाअघि ऋण लिएर लगानी गरियो, त्योअनुरूपको प्रतिफल त भएन । व्यापार सबै क्षेत्रमा घटेको छ । ब्याज घटेको छैन । त्यसमै रहँदा ऋणबाट उम्कन नसक्ने अवस्था भएपछि गुन्द्रुक र आँटोपीठोतिर लागेको उनको अनुभव छ । व्यापार गर्ने सन्दर्भमा स्वदेशै प्राथमिकता दिए पनि मालसामान बजारमा पठाएपछि पैसा उठिहाल्छ भन्ने सुनिश्चित छैन । बाहिर पठाउँदा पैसा ‘एड्भान्स’मा आउने भएपछि त्यसलाई मध्यनजर गरी अघि बढिरहेको अधिकारीको भनाइ छ ।

उद्योगले प्रतिदिन करिब एक सय ५० किलोसम्म गुन्द्रुक निकालिरहेको छ । जाडोयाममा प्रशस्तै साग प्राप्त भए पनि अरु मौसममा त्यसको व्यवस्थापन कसरी मिलाउने भन्ने प्रश्न छ । कसैलाई हेपेर गाली गर्नुपऱ्यो भने ‘यो गुन्द्रुकले केही गर्न सकेन’ भन्दा यसको महत्त्व नबुझेको हो कि भन्ने भान पर्न सक्छ । हुन त नेपाली समाजमा ‘जात फाल्नु गुन्द्रुकको झोलमा’ भन्ने अर्गानिक उखान नै छ ।

गुन्द्रुकमा पोटासियम, भिटामिन सी, आइरन, सोडियम धेरै पाइने र रेसादार भएकाले कोलेस्ट्रोललाई घटाउन योगदान पुऱ्याउने विश्वास गरिएको छ । त्यसो त सरस्वती घरेलु तितौरा उद्योग गोकर्णेश्वर, भाटभटेनी फुड्स उद्योग, पहाडी फुड्स प्रालि रुपन्देही, एन्जल कृषि फार्म दक्षिणकालीबाट उत्पादित गुन्द्रुक भाटभटेनीलगायत ठूला मार्टहरुमा उपलब्ध हुँदै आएको छ ।

खाद्य प्रविधि तथा गुणस्तर नियन्त्रण विभागका वरिष्ठ अनुसन्धान अधिकृत हुमाकुमारी बखिम भन्छिन्, ‘गुन्द्रुक तयार गर्दा सरसफाइ र सुकाउने विषयमा अली बढी ध्यान पुऱ्याउनपर्छ ।’ गुन्द्रुक गुन्द्री, नाङ्लो, माद्रो र त्रिपालमा सुकाउने गरिन्छ । त्यसरी खुल्ला सुकाउँदा कपाललगायत वस्तु पर्नसक्ने हुँदा जालीदार कपडाले छोप्नु बुद्धिमानी हुनेछ ।

घरघरमै विभिन्न प्रक्रिया अपनाएर बनाइने भएकाले गुणस्तरमा एकरुपता नभए तापनि स्वच्छता र सरसफाइको हिसाबले एकरूपता हुनुपर्छ । गुन्द्रुकमा लाभदायक मानिने जीवाणु, मिनिरल र फाइबरको स्रोत मानिने भएकाले स्वास्थ्य र पौष्टिकताका हिसाबले पनि राम्रो मानिएको छ । अरु उन्नत जातका तुलनामा हाम्रा रैथाने रायोको गुन्द्रुक स्वादिलो र गुणस्तरीय मानिन्छ ।

इलामको रोङ गाउँपालिकाले आफैं उद्योग सञ्चालनको अनुमति लिएर सञ्चालन गर्दै आएको छ । पुराना बन्द भएका चिया उद्योगलाई गुन्द्रुक उत्पादन गर्नका लागि पुनःस्थापना गरिएको छ । चिसो याममा गुन्द्रुकको तिउन बढी खाइन्छ भने गर्मीमा अचार बढी रुचाइन्छ । आलु, प्याज, गोलभेँडा, भटमास मिसाएको गुन्द्रुकको स्वाद त बयान गरिसाध्य नै हुन्न । विभागका अनुसार, पछिल्लो समय गुन्द्रुक बाहिर निकासी गर्ने क्रममा जाँच परीक्षणका लागि आउने क्रम बाक्लिएको छ ।

तर यहाँ सामान्य परीक्षण जलाम्स् अर्थात् पानीको मात्रा कति छ भनेर परीक्षण गरिन्छ । अमिलो भएकाले हानिकारक जीवाणु कमै रहन्छ । नेपाली परम्परागत खाद्यवस्तुको आफ्नै खाले पौष्टिक तत्त्व र महत्त्व छ । प्रत्येकले घरमा बनाइँदै खाएको हो । उपलब्धताको पहुँच र बनाउन सजिलो भएकाले पनि रोजाइमा परेको हो । सहरीकरण बढ्दै गएको, बसाइँसराइँ तीव्र हुँदा कार्य व्यवस्थाले सहरीयाले बनाउन नभ्याउँदा यसको बजार विस्तार बढ्दै गएको छ ।

विदेशमा रहेका नेपालीले आफ्नो गाउँ र देशको परम्पराको परिचय र जीब्रोको स्वाद रहेको गुन्द्रुकप्रतिको चाहना बढेको छ । यातायातलगायत सुविधा र विकासको एउटा पाटोकारुपमा यो सहर भित्रिएन पाएको छ ।

गुन्द्रुकका लागि इलाम, धनकुटा, दोलखा, म्याग्दी, स्याङजा, बागलुङ, ओखलढुङ्गा, भोजपुर, सिन्धुलीलगायत पहाडी जिल्ला प्रख्यात छ । खाद्य सुरक्षाका लागि पनि गुन्द्रुकले टेवा पुऱ्याउँछ । सागको बजारीकरण नहुँदा त्यसलाई खाँदेर गुन्द्रुक बनाउँदा खाद्य सुरक्षामा योगदान दिन्छ ।

‘गुद्रुकलाई पकाउन्न पर्दैन’ भन्ने नेपाली समाजको उखानजस्तै तत्काल तरकारी उपलब्ध नहुँदा भातको भाडमा सिधैं गुन्द्रुक मिसाएर तरकारीका रूपमा खान सकिन्छ । तिल, सिलाम, आलस र फिलिङ्गेको छोपमा अमिलो र सुकेको खुर्सानी मिसाएर क्षणभरमै स्वादिलो अचार तयार हुन्छ । नेपालीको बाक्लो बसोबास रहेका क्षेत्र अमेरिका, जापान, अष्ट्रेलिया, खाडीमुलुकमा सञ्चालित नेपाली होटल र रेष्टुराँमा मासको दाल, तितौरा र गुन्द्रुकको अत्यधिक माग रहेको छ ।

व्यवसायी शान्ता अधिकारी छिट्टै दुई सय किलो गुन्द्रुक जापान निर्यात गर्ने तयारी गरिरहेको बताउँछिन् । त्यस उद्योगले एक सय र दुई सय ग्रामका बेग्लाबेग्लै प्याकेट बनाएको छ । ठूलो परिणाममा माग भएमा तत्काल पुऱ्याउन सक्ने अवस्था नरहेको उनको भनाइ छ ।

सरकारले गुन्द्रुक उत्पादनलाई पकेट क्षेत्र तोकेर सहुलियत दरमा ऋण सहयोग उपलब्ध गराएमा फलदायी हुनेछ व्यवसायी बताउँछन् । काम पाइएन भनेर विदेश पलायन भइरहेका युवा पुस्तालाई भुसालले गुन्द्रुक उत्पादन र बजारीकरणका लागि गरिरहेको प्रयास प्रेरणाको स्रोत बन्न सक्छ । सो उद्योगमा लक्ष्मी तामाङले विशेषज्ञका रुपमा काम गरिरहनुभएको छ । गरिबका घरमा बाध्यताको तिउन अहिले उच्च घरनाका लागि भान्छाको महत्त्वपूर्ण परिकार बनेको छ ।

# इजरायलद्वारा पुनः हमासविरुद्ध आक्रमण



काठमाडौं । इजरायलले गाजा पट्टीमा पुनः सैनिक कारवाही शुरू गरेको छ । इजरायल र हमासबीचको पहिलो चरणको युद्धविराम सकिएको र दोस्रो चरणको वार्ताका लागि कहिले सहमति हुने भन्नेमा दुवै पक्ष शंकाको घेरामा रहेका बेला इजरायलले आक्रमण गरेको अन्तर्राष्ट्रिय सञ्चार माध्यमहरूले जनाएका छन् । जनवरीमा शुरू भएको तीन चरणको युद्धविराम कसरी कायम राख्ने भन्ने विषयमा इजरायल र हमासबीचको असहमतिबीच हिंसा बढ्दै गएको हो ।

सीएनएनका अनुसार इजरायली प्रधानमन्त्री नेतान्याहुको कार्यालयले हमासविरुद्धको कारबाही पुनः शुरू गर्ने जनाएको छ । इजरायली डिफेन्स फोर्सले ट्वीटरमा लेखेको छ, ’गाजा स्ट्रिपमा हमास आतंकवादी संगठनसँग सम्बन्धित आतंककारी लक्ष्यहरूमा व्यापक हमला गरिरहेको छ ।’

आइडीएफका अनुसार उनीहरूको सेनाले हमासको लक्ष्यमा व्यापक आक्रमण गरेको छ । यी आक्रमणमा धेरैको ज्यान गएको समाचारमा जनाइएको छ । प्रत्यक्षदर्शीहरूका अनुसार मध्य गाजाको देइर अल-बालाहमा तीनवटा घर, गाजा शहरको एउटा भवन र खान युनिस र रफाहका लक्ष्यहरूमाथि आक्रमण भएको थियो । गाजा शहरमा पाँच बालबालिकासहित ३० भन्दा बढी व्यक्तिको मृत्यु भएको अलजजीराले जनाएको छ । हमलामा २० भन्दा बढी घाइते भएका छन् ।

केही दिनअघि इजरायल युद्धविरामको दोस्रो चरणमा जानुको सट्टा पहिलो चरणको समयावधि बढाउन अडिग रहेको खबर आएको थियो । युद्धविरामको दोस्रो चरणमा इजरायल रक्षा बल पूर्ण रूपमा गाजा छोड्नुपर्ने थियो तर, इजरायल यो चाहँदैन । एक उच्चस्तरीय इजरायली स्रोतकाअनुसार हमासले गाजा छोड्नुपर्नेछ, त्यसपछि मात्र इजरायल युद्धविरामको दोस्रो चरणको लागि अगाडि बढ्नेछ ।

त्यसैले दोस्रो चरणको युद्धविरामको सट्टा इजरायलले पहिलो चरणको युद्धविरामको समयावधि बढाउन चाहेको सीएनएनले जनाएको छ । इजरायल डिफेन्स फोर्सका अनुसार वायुसेनाले गाजामा हमासको लक्ष्यमा हवाई आक्रमण गरिरहेको छ । टाइम्स अफ इजरायलका अनुसार यी आक्रमणमा हालसम्म २०० जनाको मृत्यु भइसकेको छ ।

सेनाले एक विज्ञप्तिमा हमासका ’आतंकवादी लुकेका ठाउँहरू’ लाई निशाना बनाएको बताएको छ ।

’हामासले हाम्रा बन्धकहरूलाई रिहा गर्न अस्वीकार गरेपछि र राष्ट्रपतिका अमेरिकी विशेष प्रतिनिधि विट कोफ र अन्य मध्यस्थकर्ताहरूले गरेका प्रस्तावहरूलाई अस्वीकार गरेपछि यो आक्रमण भएको हो,’ विज्ञप्तिमा भनिएको छ ।

जनवरी १९ मा इजरायल-हमास युद्धविरामपछि गाजामा इजरायलले गरेको यो सबैभन्दा ठूलो हमला हो । इजरायलले विगत दुई हप्तादेखि गाजामा खाद्यान्न, औषधि, इन्धन र अन्य आपूर्तिहरू अवरुद्ध गरेको छ र हमासलाई युद्धविराम सम्झौतामा परिवर्तनहरू स्वीकार गर्न माग गरेको छ । हमासले इजरायली हवाई आक्रमणलाई युद्धविरामको उल्लङ्घन भएको बताएको छ । हमासले इजरायलको यो कदमले आफ्ना बन्धकहरूलाई खतरामा पारेको र यसका लागि इजरायली सरकारलाई जिम्मेवार ठहराएको धम्की दिएको छ । हमासले इजरायलले विना उत्तेजना आक्रमण गरेको बताएको छ ।

इजरायलका प्रधानमन्त्री बेन्जामिन नेतन्याहुले युद्धविरामको वार्ता अघि बढ्न नसक्दा आफूले यी आक्रमण गरेको बताएका छन् । नेतान्याहुले धेरै पटक फेरि युद्ध शुरू गर्ने धम्की दिएका छन् ।

पहिलो चरणको युद्धविराम मार्च १ मा समाप्त भएको थियो । पहिलो चरणमा हमासले ८ शवसहित ३३ जना बन्धकलाई रिहा गरेको थियो । योसँगै इजरायलले २ हजार प्यालेस्टिनी बन्दीलाई रिहा गरेको थियो । इजरायल र हमासबीच युद्धविरामको दोस्रो चरणको वार्ता अझै शुरू भएको छैन ।

यस चरणमा करिब ६० जना बन्धकहरूलाई रिहा गरिने थियो । साथै युद्धलाई पूर्णरूपमा अन्त्य गर्ने विषयमा पनि छलफल हुने थियो । इजरायल र प्यालेस्टाइनबीच कैदी आदानप्रदानको यो सम्झौता तीन चरणमा सम्पन्न हुनेछ । एजेन्सीको सहयोगमा

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

# सम्पादकीय

## सेवा सुविधा भोगको लोभ राख्नु नैतिकता होइन !

दलगत राजनीतिमा संलग्न वा सक्रिय हुने व्यक्ति समाजसेवी हुने मान्यता रहेको छ । किनकी राजनीतिक दलको प्रमुख उद्देश्य भनेको राज्यसत्तामा पुगेर देश र जनताको हक, हित र आर्थिक समृद्धिको लागि कार्य गर्नु हो । तर नेपालको सन्दर्भमा नेपाली राजनीतिक दलका नेताहरुले राजनीतिलाई आय आर्जनको रुपमा प्रयोग गर्दै आइरहेको छ । यसको ज्वलन्त उदाहरण भनेको राजनीतिक नेता कार्यकर्ताहरुको विलासी पूर्ण जीवनशैली जो आम जनसमुदायमा आलोचनाको विषय बनेको छ ।

राजनीतिक नेताहरु देश र जनताको आर्थिक समृद्धिको लागि काम गरिरहेको र राज्यमा सुशासन कायम गर्नमा प्रतिबद्ध रहेको विभिन्न सार्वजनिक मञ्चमा अभिव्यक्ती दिने गर्दछ । तर तिनको विगतको जीवनशैली र राज्यसत्तामा पुगेपछिको जीवनशैली अनि सुरक्षा व्यवस्थाका कारण आम जनसमुदाय पीडित बनेको अवस्था छ । साथै नेपालबाट राजतन्त्रको अन्त्य भई गणतन्त्र स्थापना भएको डेढ दशकको अवधिमा राज्यमा रहेका आमजनसमुदायले महशुश गर्ने गरी परिवर्तन भएको पाएको छैनन् । तर सत्तामा पुगेका राजनीतिक दल र तिनका नेता तथा कायृकर्ताहरु अनि जनप्रतिनिधिहरुको जीवनशैलीमा भने आमूल परिवर्तन भइरहेको देखिएको छ , जुन आम जनसमुदायको असन्तुष्टिको कारकतत्व पनि हो ।

इसै सन्दर्भमा हालै विशिष्टलाई राज्यले नीतिगत रुपमा कानुन नै बनाएर सेवा सुविधा दिन बनाउन लागेको कानुन सुरुमै विवादको घेरामा परेको छ । विधेयक प्रस्तुत नहुँदै सामाजिक सञ्जाल, सञ्चार माध्यममा मात्र होइन संसदमा समेत सो प्रस्तावको चर्को आलोचना भएको छ । अहिले पनि केही पूर्वविशिष्ट पदाधिकारीलाई राज्यले मूलतः मन्त्रिपरिषद्को तजबिजमा सुविधा दिइआएको छ । यसरी कानुनबिना दिइएको सुविधाप्रति महालेखाले प्रश्न उठाइएको छ । साथै यसलाई सर्वोच्च अदालतले पनि कानुन बनाएरमात्र सुविधा दिन २ पटक सरकारलाई आदेश दिएको थियो ।

सम्भवतः महालेखाको सुझाव र सर्वोच्च अदालतको आदेशसमेत कार्यान्वयन गर्ने क्रममा सरकारले पूर्वविशिष्ट व्यक्तिहरूलाई दिइने सुविधालाई व्यवस्थित गर्न कानुन बनाउन लागेको हो । यही बहानामा राज्यको ढुकुटी थप दोहन गर्ने नियत नभए सरकारको यो अग्रसरता सराहनीय नै देखिन्छ ।

जनसाधारणका साथै समाजमा पनि अहिले राजनीतिक नेताहरूप्रति वितृष्णा बढेको छ । समाजले राजनीतिलाई पेसाका रूपमा नभई सेवाका रूपमा हेर्ने तर राजनीतिकर्मीहरूले भने राज्यको ढुकुटी दोहन गर्न नहिचकिचाउने गरेका कारण जनतामा आक्रोशको स्थिति बढेको हो । कानुन बनाउने नाममा मूलतः पूर्वविशिष्ट पदाधिकारीलाई दिइआएको सेवासुविधा वृद्धि गरिने र सुविधा पाउन पदहरू बढाइने सन्देह जतातत‍ै प्रकट भइरहेको छ । विगतमा सांसदहरूलाई आजीवन सुविधा दिनेसम्मका प्रयासहरू गरिएकाले पनि जनमानसमा सन्देह उब्जनु अस्वाभाविक पनि होइन । यसपटक भने सुविधा बढाउने वा सुविधा दिइने पदहरूको घेरा फराकिलो बनाउने दुस्साहस गर्न सरकार पक्कै हिचकिचाउनेछ । त्यसो त मन्त्रीहरूले नै सुविधा बढाउने गरी कानुन नबन्ने घोषणा सार्वजनिकरूपमै गरिसकेका छन् । सरकारलाई पनि शङ्काको सुविधा नदिनु अन्याय हुन्छ ।

विधेयक मस्यौदा गर्दा नै सरकारले जनमानस बुझ्न सक्यो भने संसद्मा व्यवधानको सामना गर्नु पर्नेछैन । अहिले दिइआएको भन्दा सुविधा पटक्कै बढ्ने र राष्ट्रपति तथा उपराष्ट्रपतिबाहेक अरू पदमा रहेकाहरूलाई दिइआएको सुविधा कटौती गर्ने व्यवस्था प्रस्तावित विधेयकमा गरिएका खासै विरोध नहोला । पूर्वराष्ट्रपति र उपराष्ट्रपतिबाहेक अरू पूर्वविशिष्ट पदाधिकारीलाई राज्यले विशेष सुविधा दिन आवश्यक र उचित देखिँदैन । पूर्वराष्ट्रपति वा उपराष्ट्रपति पनि सक्रिय राजनीतिमा रहने हो भने राज्यको ढुकुटीबाट विशेष सुविधा दिनु वा लिनु न्यायोचित हुँदैन ।

यसैगरी अहिले सुरक्षाकर्मी उपलब्ध गराउँदा पनि पुनः विचार गरिनु आवश्यक देखिन्छ । अहिले पूर्वमात्र होइन बहालवाला विशिष्ट पदाधिकारीलाई सुरक्षा जोखिमभन्दा बढी सान देखाउनका लागि सुरक्षाकर्मी उपलब्ध गराइएको देखिन्छ । यसरी विशिष्ट पदाधिकारीहरूको तामझाम पनि अहिले जनमानसमा गणतन्त्रको छवि बिगार्ने एउटा कारक बनेको देखिन्छ । यसैले बहालवाला र पूर्वविशिष्ट पदाधिकारीहरूको तामझाममा पनि नियन्त्रण गर्ने व्यवस्था प्रस्तावित विधेयकमै समावेश गरिनु उचित हुनेछ । सुविधा कम गर्ने र सीमित व्यक्तिले मात्र पाउनेगरी ऐन बनेमा त्यसको सकारात्मक प्रभाव पर्नेछ । राजनीतिक दलहरु र तिनका नेता कार्यकर्ताहरुको यही रवैयाका कारण पनि अहिले आम जनसमुदाय बीच देखिएको आक्रोसको फाई उठाउन राजावादीको रुपमा चिनिएका र निरंकुश राजसंस्थाको पक्षधरहरु विगतकै राजसंस्था सही भएको भ्रम समाजमा फैलाउन क्रियाशील रहेको देखिन्छ । यसमा नेपालको संविधान र गणतन्त्रलाई स्वीकार गर्दै बर्तमान राजनीतिमा आएको राष्ट्रिय प्रजातन्त्र पार्टीसमेत राजतन्त्र बहालीको मुद्दामा खुलेर लागेको छ । यसमा संघीय लोकतान्त्रिक गणतन्त्रात्मक राज्य व्यवस्थाका पक्षधर शक्ति सचेत हुनु आवश्यक छ । समाज कहिल्यै पश्चागमन हुँदैन । समाज जहिले पनि अग्रगमन तर्फ अग्रसर हुन्छ । यो विषय प्रत्येक राजनीतिक दलका नेता, कार्यकर्तालगायत आम जनसमुदायले बुझ्न जरुरी छ ।

तसर्थ बर्तमान सरकारले राजनीतिलाई समाजको हितको लागि प्रयोग गर्ने गरि कानुन निर्माणको पहल गर्नु आवश्यक छ । किनकी बर्तमानमा बिशिष्टलाई दिइने गरिएको सेवा सुविधा अपेक्षाकृत बढी नै रहेको आर्थिक विश्लेषकहरुको बिश्लेषण रहेको छ । साथै राजनीति व्यक्ति स्वयंको रोजाइ भएकाले सेवा सुविधा भोगको लोभ राख्नु राजनीतिक दलका नेता तथा कार्यकर्ताहरुको नैतिकता होइन ।

# स्ववियुलाई चन्दा असुली र आतंकको अखडा बनाउने कि विद्यार्थी कल्याणको ज्ञानपुञ्ज ?

● *स्वर्णिम वाग्ले*

विश्व इतिहासमा युगीन राजनीतिक परिवर्तनका संवाहकका रूपमा विभिन्न विद्यार्थी आन्दोलनहरूको स्मरण गर्ने गरिन्छ । गत वर्ष बंगलादेशमा विद्यार्थीहरूको विद्रोहले चार/चार पटक चुनाव जितेकी शेख हसिनालाई अहिले दिल्लीमा शरणार्थीको रूपमा सीमित गरिदिएको छ । सन् २०१८ मा झन्डै झन्डै ८६ प्रतिशत संसद उहाँको नियन्त्रणमा थियो, पूरै राजनीतिक प्रणाली कब्जा गरेकी थिइन् ।

यहाँ दुई तिहाइको दम्भको कहिलेकाँही प्रदर्शन हुन्छ, हसिनाले पछिल्लोमा पनि झन्डै झन्डै तीन चौथाइ संसदीय पकड थियो तर एक महिनाको अवधिमा विद्यार्थीहरूको बलमा उनी आज बहिर्गमित अवस्थामा छिन् ।

सन् १९६८ मा सम्पूर्ण पाश्चात्य जगत् नै हल्लाउनेगरी टोकियोदेखि पेरिस, लण्डनदेखि सन- फ्रान्सिस्कोसम्म भएका विद्यार्थी आन्दोलनहरूले एक किसिमको सांस्कृतिक पानीढलो नै स्थापित गऱ्यो ।

दोस्रो विश्वयुद्धपछि जन्मिएको पुस्ताले भियतनाम युद्ध, लैंगिक समतादेखि लिएर अनेक मुद्दाहरूलाई उठाउँदै एककिसिमको 'कल्चरल वाटरसेड' नै स्थापित गरेको हामीले देख्न पायौं । चीन जस्तो फरक राजनीतिक पृष्ठभूमिको मुलुकमा पनि सन् १९१९ मा विद्यार्थीहरूले गरेको आन्दोलनबाट नै त्यहाँको राजनीतिक कोल्टेफेराइ भएको हामी हेर्न सक्दछौं ।

कम्युनिष्ट पार्टीको स्थापना पनि त्यसैको प्रेरणामा भएको, र त्यही कम्युनिष्ट प्रणालीलाई चुनौती दिने गरेर त्यसको ७० वर्षपछि तियानमेन स्क्वायरमा भएको विद्रोह पनि विद्यार्थीहरूबाटै भएको थियो ।

हाम्रै नेपालमा पनि २०३६ सालदेखिको उदाहरणहरू हेर्दा जुल्फिकर अलि भुट्टोलाई फासी दिएपछि भड्किएको विद्यार्थी आन्दोलन जनमत संग्रहसम्म पुग्यो । बलबहादुर केसी, शरणविक्रम मल्लहरूलाई ठेलागाडामा राखेर मोसो दलिएको इतिहास हामीले पनि पढेका छौं ।

तर, त्यो प्रेरणादायी राजनीतिक परिवर्तनलाई एउटा विद्यार्थीहरूकै बलमा कोल्टेफेराइ र परिवर्तन गरिएको स्मरणीय इतिहास हामी सबैले गौरव गर्नलायक पनि छ । यो ऐतिहासिकताको आलोकमा विद्यार्थीहरूको आन्दोलनहरूको इतिहास एकदमै गौरवशाली पनि छ ।

समाजमा घृणा फैलाउने कारखानाको रूपमा विश्वविद्यालयलाई हामीले जसरी उत्पादन गरिरहेका छौं, त्यो सुधार गर्नुपर्ने दिशातिर हामी जानुपर्नेछ ।

तर गत केही हप्तादेखि नेपालका हजारभन्दा क्याम्पसहरूमा जुन किसिमको ताण्डव देखिँदैछ, तालाबन्दीदेखि बन्द हड्ताल, कुटपिट, तोडफोड, चन्दा आतंक, दलभित्रका गुटगत प्रदर्शन इत्यादि र माउ पार्टीका कमाण्डरहरू नै तोकेर जुन किसिमले कण कणमा राजनीतीकरण र दलीयकरण गरिएको छ, विश्वविद्यालयहरू र उच्च शिक्षा प्रणालीलाई क्षतविक्षत गर्ने तरिकाले कामहरू अगाडि बढेका छन्, त्यो असाध्यै चिन्ताजनक छ । चेतनाको थलो हुनुपर्ने क्याम्पसहरू आज रणमैदान बनेका छन् ।

हाम्रा विश्वविद्यालयहरू स्वायत्त हुनुपर्ने होइन र ? एक दुई दिनको समय लिएर एकदमै शान्तिपूर्ण तरिकाले क्याम्पसका प्रशासकहरूले सामान्य तबरले गराउन सक्ने निर्वाचनहरू आज जुन प्रतिष्ठाको लडाइँ, जुँगाको भिडन्त देखिइराखेको छ, त्यो असाध्यै निन्दनीय नै छ ।

म पढ्दै थिएँ, गत वर्ष लगातार तीन/चार वर्षदेखि एक लाखभन्दा बढी नो अब्जेक्सन सर्टिफिकेटहरू इस्यु भएका छन् । यो देशभित्रै पढ्न सकिएन, अब बाहिर नै जानुपर्छ भन्नेछ । सरकारी अड्डाहरूमा पनि दैनिक दुई हजार जति निवेदन पर्ने र कर्मचारीहरूले १२ घन्टा काम गर्दा पनि जम्मा सय वटाजति नो अब्जेक्सन सर्टिफिकेट, एउटा बाढी नै छ । यो प्रतिभाशाली विद्यार्थी र प्राचार्यहरूको जुन डरलाग्दो पलायन छ, त्यसको कारण के होला ? अब खोज्ने बेला भएन र ?

त्यसैले केही दर्जन नेता उत्पादन गर्नका लागि लाखौं नेपाली युवाहरू, विद्यार्थीहरूको भविष्य जोखिममा राख्ने गरिएको छ । पछिल्लो समय केआईआईटीको प्रसंगबारे यो संसदमा हामीले छलफल गऱ्यौं । प्रकृति लम्सालको दुःखद निधन सँगसँगै उडिसा जस्तो गरिब राज्यको एउटा सहरको एउटा कुनामा रहेको विश्वविद्यालयमा पनि १५ सय नेपाली विद्यार्थीहरू पढ्छन् भन्दा हामी झसंग पनि भएका थियौं । त्यसैले यो समाजमा घृणा फैलाउने कारखानाको रूपमा विश्वविद्यालयलाई हामीले जसरी उत्पादन गरिरहेका छौं, त्यो असाध्यै सुधार गर्नुपर्ने दिशातिर हामी जानुपर्नेछ ।

आज संसदमा रहनुभएका धेरै नेताहरू विद्यार्थी आन्दोलनबाटै आउनुभएको छ । २०३६ साल, २०४६ सालका कुराहरू त मैले स्मरण गरें तर शैक्षिक सुधार, विश्वविद्यालयहरूको सुधारमा उहाँहरूको भूमिका के कस्तो छ, त्यो इतिहासको कठघरामा पनि उहाँहरू उभिनुहुनेछ ।

म बेलायतको सहयोगमा बनेको बूढानीलकण्ठ स्कुलमा पढ्ने सौभाग्य पाएँ । सन् १९८७ मा पशुपति शमशेर राणा शिक्षामन्त्री हुनुहुन्थ्यो । उहाँले मलाई पुरस्कार दिएको मलाई सम्झना छ । म सानो विद्यार्थी हुँदा । तर आज त्यो बूढानीलकण्ठ स्कुल त्यो ब्रिटिशको पालाको जस्तो रहेन, शैक्षिक स्तर खस्कियो भन्दा मलाई मन चसक्क हुन्छ । तपाईंहरूको मन दुख्दैन, आफूले पढेर आएका क्याम्पसहरूको आज यो दुर्दशा देख्दा ?

भर्नादर घटेका छन् । प्रविधिमा लगानी छैन । अनुसन्धान ठप्प छ । सोध छैनन् । र, यो पलायनको डरलाग्दो प्रवाह कसरी रोक्ने ? त्यसैले सुधारमा यहाँ अनेकअनेक विषयमा संसदीय समितिहरूको माग हुन्छ । गरौं न एउटा संसदीय समितिको गठन । स्वतन्त्र विद्यार्थी युनियनहरूको संरचना र निर्वाचन प्रक्रियामा सुधार गर्नुपर्ने बेला भएन ? पार्टीहरूको यस्तो दबदबा र हस्तक्षेप नहुने कानुनी प्रबन्ध गरौं । स्ववियुको भूमिका नै पुनर्परिभाषित गर्नुपर्नेछ । यिनीहरू चन्दा असुलीको थलो र आतंकको अखडा होइन, विद्यार्थी कल्याणको एउटा ज्ञानपुञ्ज बनाउने गरी अगाडि जाऔं । विश्वविद्यालयको स्वायत्तता बारे पनि हामीले अब फरक ढंगले सघन बहस गर्नुपर्ने बेला आएको छ । विश्वविद्यालयहरूलाई गुणस्तरीय, अनुसन्धानमुखी, नवीन विचारको थलो बनाउने कि पार्टीको खेलौना बनाएर उच्च शिक्षा प्रणालीलाई ध्वस्त बनाउने ? यो यक्ष प्रश्न अब समाजका, नागरिक समाजका अगुवाहरू वा विचारहरू मात्र होइन, यो संसदप्रति पनि तेर्सिएको म मान्दछु ।

(चैत ३ गतेको प्रतिनिधिसभा बैठकमा सांसद वाग्लेले गरेको सम्बोधनको अंश)

## राजा...

बढ्यो । जनआन्दोलनले राजालाई शक्ति त्याग्न बाध्य बनायो ।

राजा ज्ञानेन्द्रको नीति

राजा ज्ञानेन्द्रले लोकतान्त्रिक प्रक्रियालाई नराम्रोसँग प्रभाव पार्ने नीति अवलम्बन गरे । उनले संसद् भङ्ग गरेर प्रत्यक्ष शासन थाले । यसले जनताको विश्वास गुम्यो ।

राजदरबार हत्याकाण्ड

राजा वीरेन्द्र र उनका परिवारको हत्याकाण्डले राजसंस्थाप्रति जनताको विश्वास झन् कमजोर बनायो । यस घटनाले राजतन्त्रको छवि ध्वस्त पाऱ्यो ।

२०४६ सालको जनआन्दोलनपछि देशमा नयाँ संविधान लागू गरिएको थियो । यही आन्दोलनले दिएको म्याण्डेटबाट देश संवैधानिक राजतन्त्रात्मक राष्ट्रमा परिणत भएको थियो । तर, माओवादीको १० वर्षे जनयुद्ध, ०६२-०६३ सालको जनआन्दोलनले राजतन्त्र अन्त्य गर्दै नेपाल संघीय लोकतान्त्रिक गणतन्त्रमा प्रवेश गरेको थियो ।

नेपालमा गणतन्त्र स्थापनाको १७ वर्ष पूरा भएको छ । तर, यति छोटो अवधिमै एकथरि मानिस नयाँ व्यवस्थाको औचित्यमाथि प्रश्न उठाउन थालेका छन् । मानौं राजतन्त्रकालमा रामराज्य थियो, त्यहाँ कुनै गरिबी थिएन, असमानता र विभेद थिएन । उन्नत प्रकारको लोकतन्त्र भएको दलील उनीहरुको छ ।

यसखाले तर्क सुन्दा राजतन्त्रकालमा 'दूधकै खोलो बग्थ्यो' भन्ने भान हुन्छ । सङ्घीयताले केन्द्रको अधिकार जनताको घर आँगनमा पुगेको, अवसरहरू सिर्जना गरेको, पूँजी परिचालन गरेको, विकासका कामले गति पाएको सङ्घीयता विरोधीहरूले देखेका छैनन् । अहिले उनीहरु यो अवस्थामा चिच्याउने, कराउनेदेखि सडकमा उफ्रिनेसम्मको परिवेश गणतन्त्रले ल्याएको हो ।

गणतन्त्रले धेरै चुनौतीको सामना गर्दैछ । राजनीतिक अस्थिरता, भ्रष्टाचार र आर्थिक असमानताजस्ता समस्या समाधान हुन बाँकी छन् । जनताले गणतन्त्रबाट धेरै अपेक्षा गरेका छन् । तर, यो प्रणालीले आफ्नो पूर्ण क्षमता प्राप्त गर्न अझै समय लिन सक्छ । यसको सफलताका लागि राजनीतिक इच्छाशक्ति, जनताको सहभागिता र सुशासन आवश्यक छ । नेपालले गणतन्त्रको मूल्य र आदर्शलाई कायम राख्दै अगाडि बढ्नु पर्छ ।

सुगौली सन्धिदेखि महाकाली सन्धिसम्म आउँदा नेपालले जे-जति क्षति बेहोऱ्यो, ती सबै सन्धिमा नेपालका राजाहरू प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा जोडिएका छन् । कतिपय सन्धिहरु राजाकै निर्देशन र रोहबरमा भएका छन् त कतिपय उनीहरु राष्ट्रप्रमुख भएका बखत । राजा गीर्वाणयुद्धको पालामा भएको सुगौली सन्धि सन् १८६० मा नेपालले ६१ प्रतिशत भूमि गुमायो ।

राजा त्रिभुवनको पालामा गरिएको नेपाल-भारत शान्ति तथा मैत्री सन्धि सन् १९५० ले सुगौली सन्धिलाई अनुमोदन गऱ्यो । महेन्द्रको पालामा सन् १९४० को नेपाल र भारतबीच भएको कोशी सम्झौताले हरेक वर्ष नेपालले डुबानको समस्या भोग्दै आएको छ । महेन्द्रकै पालामा सन् १९५९ भएको गण्डक सम्झौताले नेपालका दर्जनौं बस्तीहरू डुबानमा परिरहेका छन् ।

वीरेन्द्रको पालामा २०५२ मा भएको महाकाली सन्धिले महाकाली नदीको पानी विद्युत र सिँचाइका लागि भारतलाई सुम्पिने काम भएको छ । जो नेपालका लागि घातक छ । त्यसो त राजतन्त्रकाल आफैँमा अँध्यारो युग थियो ।

राजाहरूले गरेको विकासकै प्रवृत्ति हेर्ने हो भने पृथ्वीनारायण शाहको एकीकरण प्रक्रियादेखि २०६५ साल जेठ १५ गते गणतन्त्रको घोषणा हुँदासम्म नेपालका शाह राजाहरुले २५० वर्ष शासन गरे । त्यस अवधिमा नेपालको विकास के-कति भयो, त्यसमाथि बहस

बाँकी पेज ७ मा

# चाँगुनारायण क्षेत्रभित्र ऊर्जामैत्री भवन निर्माण गर्न आग्रह

भक्तपुर । चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्रीले नगरपालिकाभित्र ऊर्जामैत्री भवन निर्माणको व्यवस्था कार्यान्वयनका लागि आग्रह गरेका छन् । नगरपालिकाले बिल्डिङ इनर्जी इफिसियन्सी इन नेपाल (बिन)सँगको सहकार्यमा यहाँ आयोजित लघु, साना तथा मध्यम उद्यमीका लागि ऊर्जा प्रभावकारी भवन 'डिजाइन' सम्बन्धी तीनदिने तालिमको आज उद्घाटन गर्दै उनले ऊर्जामैत्री भवन निर्माण गर्न नागरिकलाई प्रोत्साहन गर्नुपर्नेमा जोड दिए ।

चाँगुनारायण नगरपालिका ऊर्जा प्रभावकारी भवन निर्माणसम्बन्धी कार्यविधि तयार गरी स्वीकृत गर्ने उपत्यकामा दोस्रो पालिका हो । ऊर्जा बचतको उद्देश्यले नगरपालिकाले आफ्नो पालिका क्षेत्रभित्र व्यापारिक, सामुदायिक तथा आवासीय भवन निर्माण गर्दा ऊर्जामैत्री हुनुपर्ने व्यवस्था लागू गरेको उनले बताए ।

नगरप्रमुख खत्रीले चाँगुनारायण नगरपालिका नयाँ सहरका रूपमा परिणत हुँदै गरेको अवस्थामा सहरलाई बस्न योग्य र ऊर्जामैत्री बनाउने अभियानमा सहयोग गर्न आग्रह गरे । उनले भने, "नगरपालिकाले ऊर्जामैत्री भवन निर्माणका लागि कार्यविधि पास गरेर कार्यान्वयनको चरणमा छौँ । घर वा भवनको नक्सा बनाउँदा नै प्राविधिकले ऊर्जामैत्री भवन निर्माणले पुर्‍याउने फाइदाबारे नागरिकलाई परामर्श दिन आवश्यक छ । यसले हाम्रो अभियानमा सहयोग पुग्नेछ ।"

कार्यक्रममा बिनका अध्यक्ष सुदेश प्रजापतिले ऊर्जामैत्री भवन निर्माण ऊर्जा बचतसँगै स्वास्थ्य र वातावरणमैत्री हुने बताए । उनले यस प्रविधिको भवनले कुल ऊर्जा खपतको करिब ६० प्रतिशत वातानुकूलन (ताप वा शीतल) हुने भन्दै नेपालमा यस्ता १० वटा विद्यालय भवन निर्माण भइसकेको र आवासीय भवन निर्माण हुनेक्रममा रहेका बताए ।

चाँगुनारायण नगरपालिकाका बस्ती तथा भवन निर्माण शाखा प्रमुख कृष्णभरोसा बस्नेतले सन् २०४५ सम्म हरितगृह ग्यास उत्सर्जनलाई शून्यमा पुर्‍याउन सरकारले जनाएको प्रतिबद्धता र सन् २०३० सम्म इँटा तथा सिमेन्ट उद्योगहरूमा कोइलाको खपत र वायु प्रदूषण घटाउनेलगायत अभियानमा नगरको योजनाले सहयोग पुग्ने विश्वास व्यक्त गरे । उनले तालिमले ऊर्जा प्रभावकारी भवन निर्माणमा दक्षता हासिल हुने बताए।

कार्यक्रममा नगरपालिकाका प्रशासन शाखा प्रमुख सुरज पौडेलले नगरपालिका १० हजार स्क्वायर फिटभन्दा माथिको भवन निर्माणमा अनिवार्य ऊर्जामैत्री हुनुपर्ने व्यवस्था भएको जानकारी दिँदै अन्य भवन निर्माण गर्दा पनि नगरपालिकाले ऊर्जामैत्री प्राविधिक र परामर्श सहयोग गर्ने बताए ।

# एभरेष्ट इन्जिनियरिङ कलेजमा दुईदिने हेकरास तालिम प्रारम्भ



काठमाडौँ । नेपाल राष्ट्रिय विश्व हिमनदी, जल तथा मौसम सप्ताह २०२५ अन्तर्गत एभरेष्ट इन्जिनियरिङ कलेजमा आजदेखि दुईदिने हेकरास तालिम प्रारम्भ भएको छ । विश्व मौसम विज्ञान संगठन (डब्लुएमओ)को आह्वानमा हरेक वर्ष मे महिनाको तेस्रो हप्तामा उक्त संगठनका सबै सदस्य राष्ट्रहरूमा विभिन्न कार्यक्रमहरू आयोजना गरी मनाइने सप्ताह यसवर्ष नेपालमा चैत्र ४ देखि १० गतेसम्म परेको छ ।

नेपाल सरकार, जल तथा उर्जा आयोगको सचिवालयको नेतृत्वमा नेपालका विभिन्न सरकारी तथा गै.स.स.हरूले यी कार्यक्रमहरू गर्ने गर्दछ । सप्ताहको पहिलो दिन जल तथा मौसमविद् समाज-नेपाल (सोहम)ले एभरेष्ट इन्जिनियरिङ कलेज, अन्तरराष्ट्रिय जल व्यवस्थापन संस्थान (इमी), द स्मल अर्थ नेपाल (सेन) र युनिभर्सल इन्जिनियरिङ एण्ड साइन्स कलेजको सहकार्यमा बाढी भविष्यवाणी गर्न र जल उत्पन्न विपद्हरूबाट समुदायलाई जोगाउन काम लाग्ने हेकरास सफ्टवेयरको तालिम कार्यक्रम सञ्चालन गरेको हो ।

तालिम कार्यक्रममा सरकारी, गै.स.स., निजी कम्पनी तथा विश्वविद्यालयका विद्यार्थी गरी २८ जना प्रशिक्षार्थीहरू सहभागी छन् । एभरेष्ट इन्जिनियरिङ कलेजका प्राचार्य विरोध रिजाल तथा सहायक प्राचार्य राजन लामाको उपस्थितिमा कार्यक्रम प्रारम्भ गरिएको थियो ।

जल तथा मौसमविद् समाज-नेपालका अध्यक्ष प्रा.डा. हरिकृष्ण श्रेष्ठले हेकरास विश्वभरी नै प्रयोग हुने सफ्टवेयर भएकोले तालिमबाट प्राप्त ज्ञान तथा सीपको प्रयोगबाट नेपालका नदीनालाहरू सम्बन्धी अनुसन्धान गर्न र विश्वका कुनै पनि देशमा सेवा प्रदान गर्ने सक्षम हुने जानकारी दिए । प्रशिक्षार्थीहरूले आफुले आर्जन गरेको सीप प्रयोग गरी आफ्नो शोध र थेसिस लेखनमा प्रयोग गर्न सकिने अभिव्यक्ति दिए । कार्यक्रमका मूल स्रोत व्यक्ति इन्जिनियर विनय शाक्यले तालिमबाट प्राप्त सीपको निरन्तर प्रयोगबाट प्रशिक्षार्थीहरूको क्षमता थप अभिवृद्धि हुने जनाए ।

# ८५ मिटर लामो विश्वको सबैभन्दा छोटो अन्तर्राष्ट्रिय सिमाना



एजेन्सी । यदि तपाईंलाई संसारको सबैभन्दा लामो अन्तर र्राष्ट्रिय सिमाना कुन दुई देशसँग छ भनेर सोधियो भने, तपाईंको उत्तर क्यानडा र अमेरिका हुनेछ । यी दुई देशहरूले एकअर्कासँग सबैभन्दा लामो अन्तर्राष्ट्रिय सिमाना साझा गर्छन् । तर पृथ्वीको सबैभन्दा सानो अन्तर र्राष्ट्रिय सिमाना कुन हो ? यो कुन दुई देशको बीचमा छ ? यसको उत्तर धेरै कम मानिसहरूलाई थाहा हुनेछ ।

संसारको सबैभन्दा छोटो सिमाना केवल ८५ मिटरको छ, जसले स्पेन र मोरक्कोलाई जोड्छ । तपाईंलाई अचम्म लाग्नेछ, तर यो एउटा सानो चट्टानसँग जोडिएको छ । यस चट्टानको नाम पेनोन डे भेलेज डे ला गोमेरा हो, जुन उत्तर अफ्रिकामा पर्छ । यो चट्टान धेरै विशेष छ, किनकि यो संसारको सबैभन्दा सानो राष्ट्रिय सिमानाको भाग हो । यो चट्टानको क्षेत्रफल लगभग १९,००० वर्ग मिटर छ । १५६४ मा, एक स्पेनी जनरल, पेड्रो डे एस्टोपिनानले यसलाई कब्जा गरे देखि यो स्पेनको एक हिस्सा रहेको छ ।

मोरक्कोले यसलाई धेरै पटक आफ्नो दाबी गर्‍यो, तर स्पेनले कहिल्यै छोडेन । यसको सुरक्षा गर्ने स्पेनी सैनिकहरू छन् । स्पेनको भूमि सीमा लगभग २००० किलोमिटर लामो छ । यो अन्तर्राष्ट्रिय सिमाना पोर्चुगल र फ्रान्ससँग जोडिएको छ । तर स्पेनको एन्डोरा, जिब्राल्टर (संयुक्त अधिराज्य) र मोरक्को जस्ता धेरै देशहरूसँग पनि सानो सिमाना छ । यी मध्ये, मोरक्कोसँगको ८५ मिटर सिमाना सबैभन्दा छोटो छ ।

यो सिमानाले पेनोन डे भेलेजलाई मोरक्कोको तटसँग जोड्छ । यो चट्टान स्पेनको ती विशेष क्षेत्रहरू मध्ये एक हो, जुन उत्तर अफ्रिकामा पर्छ । यसमा सेउटा, मेलिला, पेनोन डे अलहुसेमास, चाफरिनास टापु र इस्ला डे पेरेजिल पनि समावेश छन् । यी स्पेन अन्तर्गत छन्, तर पूर्ण देश मानिने छैनन् । पहिले यो चट्टान एउटा टापु थियो । १९३४ मा भूकम्प आयो र एउटा सानो च्यानल बनायो, त्यसपछि टापु प्रायद्वीप बन्यो । त्यसबेलादेखि यो ८५ मिटर सीमानालाई विश्वको सबैभन्दा छोटो सीमाना भनिन्छ ।

यस ठाउँमा अहिले स्पेनी सैनिकहरू मात्र बस्छन् । तिनीहरूले यसको निगरानी गर्छन् र तिनीहरूको टोली हरेक महिना परिवर्तन हुन्छ । त्यहाँ पानी र बिजुली छैन । यस्तो अवस्थामा, स्पेनी नौसेनाले जहाजहरूबाट सिपाहीहरूका लागि सामानहरू ल्याउँछ । सन् २०१२ मा, केही मानिसहरू यो सानो पहाड चढेका थिए, जो सेउटा र मेलिलालाई मुक्त गर्ने समितिका थिए । उनीहरूले स्पेनी झण्डा हटाए र मोरक्कनको झण्डा फहराइदिए । यो सबै केही मिनेटसम्म चल्यो । स्पेनी सैनिकहरूले तुरुन्तै मोरक्कनको झण्डा हटाए र ती मानिसहरूलाई पक्राउ गरे । त्यसपछि यसलाई सानो आक्रमण मानियो । यो चट्टानमा बाहिरबाट कोही आएको यो अन्तिम पटक थियो । पेनोन डे भेलेज सानो र सुनसान ठाउँ हो, तर स्पेन मोरक्कोलाई हस्तान्तरण गर्न चाहँदैन, यद्यपि यो यसको भूमि सिमानाबाट टाढा छ ।

# काँक्रोले बनाउँछ हड्डी बलियो, मुटु र मिर्गौलालाई फाइदै फाइदा

काठमाडौं । अब बिस्तारै गर्मी सुरु हुँदै छ । सायदै तपाईले पनि याद गर्नु भएको होला चैत लागेदेखि दिउँसोको समयमा गर्मी बढेको छ भने बिहान बेलुका केही मात्रामा चिसो छ । यो गर्मीको मौसममा हामीले खानेकुरालाई निकै ध्यानमा राख्नु पर्ने हुन्छ ।

आज हामी चर्चा गर्ने छौं गर्मीमा काँक्रो खानुका फाइदाहरू । काँक्रोमा ९६ प्रतिशत पानी हुन्छ, जसले गर्मीमा शरीरलाई हाइड्रेटेड राख्छ । यसले ताजगी प्रदान गर्नुका साथै स्वास्थ्यका लागि पनि निकै फाइदाजनक हुन्छ ।

अन्तर्राष्ट्रिय मिडिया दैनिक भास्करमा उल्लेख भए अनुसार दक्षिण एसियामा करिब ३ हजार वर्षअघि काँक्रो खेती सुरु भएको थियो । यो पहिलो पटक भारतमा खेती भएको मानिन्छ ।

यहाँबाट बिस्तारै सिल्क रुट र व्यापारिक मार्ग हुँदै चीन, मध्यपूर्व र युरोपसम्म फैलियो । पुरातन इजिप्टियन, ग्रीक र रोमन सभ्यताहरूमा पनि कोक्राहरू उल्लेख गरिएको छ । त्यस बेला पनि यसलाई स्फूर्तिदायी र स्वस्थ आहार मानिन्थ्यो । वनस्पति विज्ञान अनुसार काँक्रो एउटा फल हो ।

काँक्रोमा भिटामिन र मिनरल्स प्रशस्त मात्रामा पाइन्छ । यसले छालाको स्वास्थ्य सुधार गर्छ, तौल नियन्त्रणमा राख्छ र पाचन प्रणालीलाई बलियो बनाउँछ।

१०० ग्राम काँक्रोमा लगभग १५ क्यालोरीहरू हुन्छन् । धेरै जसो पानी छ। यसमा प्रोटिन, कार्ब्स र फाइबर पनि हुन्छ ।

काँक्रोमा भिटामिन ए र के हुन्छ । यसमा पोटासियम र म्याग्नेसियम जस्ता शरीरका लागि आवश्यक खनिजहरू पनि पाइन्छ ।

काँक्रोले गर्मीमा निर्जलीकरणबाट बचाउँछ । यो कम क्यालोरी खाना हो । त्यसैले काँक्रो खाँदा तौल नियन्त्रणमा पनि सहयोग पुग्छ । यसमा पाइने भिटामिन सी र एन्टिअक्सिडेन्ट छालाको स्वास्थ्यका लागि फाइदाजनक हुन्छ । काँक्रोले शरीरलाई डिटोक्सिफाइ गर्न पनि मद्दत गर्छ ।

दैनिक ७ देखि ८ गिलास पानी पिउनु पर्छ । यसबाट पाचन क्रिया, जोर्नी दुख्ने, मिर्गौलाको कार्यक्षमता, स्मरण शक्ति र शरीरको तापक्रम नियन्त्रणमा रहन्छ । यदि गर्मी धेरै छ वा पानी पिउने मन छैन भने काँक्रो एक राम्रो विकल्प हुन सक्छ । यसमा ९६ प्रतिशत पानी हुन्छ, जसले शरीरलाई हाइड्रेटेड राख्न मद्दत गर्छ । यसलाई सलादको रूपमा खान सकिन्छ ।

काँक्रोमा पाइने पानी र फाइबरले पाचन प्रक्रियामा मद्दत गर्छ । यसले खानाको उचित पाचन र पोषक तत्वहरू अवशोषित गर्न मद्दत गर्दछ। फाइबरले कब्जियतबाट बच्न र पेट सफा राख्न पनि मद्दत गर्छ।

काँक्रोमा कम क्यालोरी र उच्च पोषण मूल्य हुन्छ। त्यसैले तौल घटाउन मद्दत गर्छ ।

काँक्रोमा कम ग्लाइसेमिक इन्डेक्स हुन्छ । यसको ग्लाइसेमाइल लोड पनि कम छ । त्यसैले काँक्रो खाँदा रगतमा चिनीको मात्रा बढ्दैन । यसबाहेक काँक्रोमा पाइने एन्टिअक्सिडेन्टले मधुमेहका कारण हुने जटिलताबाट पनि बचाउँछ ।

काँक्रोमा पोटासियमको मात्रा धेरै र सोडियम कम हुन्छ। त्यसैले रक्तचाप नियन्त्रणमा रहन्छ। यसमा पाइने फाइबर र क्युकरबिटासिन बीले कोलेस्ट्रोल कम गर्छ र धमनीमा बोसो जम्मा हुनबाट रोक्छ। यसले हृदय रोगको जोखिम कम गर्छ।

काँक्रोमा क्युकरबिटासिन बी (सीयूबी) नामक यौगिक हुन्छ। यसले कलेजो, स्तन, फोक्सो र प्रोस्टेट क्यान्सरको जोखिम कम गर्छ । यसले क्यान्सर कोशिकाहरूको वृद्धि रोक्न र तिनीहरूलाई हटाउन पनि मद्दत गर्न सक्छ । कागतीको बोक्रामा क्यान्सरबाट जोगाउने तत्त्व पनि पाइन्छ । त्यसैले यसलाई बोक्रा नगरी खानु बढी फाइदाजनक हुन्छ । -दैनिक भास्करबाट

# धन प्राप्तिअघि देखिने पाँच विशेष संकेत

काठमाडौं- वास्तुशास्त्रका अनुसार जीवनको सकारात्मक ऊर्जासँग जोडिएका केही सङ्केतहरू छन् । यी सङ्केतहरूले तपाईंलाई जीवनमा धन प्राप्त हुने सङ्केत गर्दछ। यी चिन्हहरू तपाईंको सुख र समृद्धिको प्रतीक पनि हुन् । उदाहरणका लागि, गाईले रोटी खाइरहेको देख्नु पनि शुभ मानिन्छ ।

विशेष गरी बिहान सबेरै गाईले रोटी खाएको देख्नु जीवनको दुखद वा पीडादायी दिनको अन्त्यको सङ्केत मानिन्छ । यसका अलावा धन प्राप्तिसँग जोडिएका अन्य विशेष सङ्केत पनि छन् । आउनुहोस्, जानौं लक्ष्मी प्राप्तिको विशेष लक्षण ।

भृकुटी फड्किनु- ज्योतिष शास्त्रमा यो चिन्हलाई धन प्राप्तिसँग पनि जोडिएको देखिन्छ । विशेष गरी यदि तपाई बिहान वा बेलुका उठ्ने बित्तिकै तपाईंको भौं (आँखाको माथिको हड्डीमा रहेको कपाल) फड्किरहेको महसुस गर्नुहुन्छ भने, तपाईंलाई देवी लक्ष्मीको आशीर्वाद दिइनेछ भनेर बुझ्नुहोस् ।

सपनामा कमलको फूल देख्नु - स्वप्न शास्त्र अनुसार हरेक सपनाको कुनै न कुनै अर्थ हुन्छ, त्यसैले सपनामा कमलको फूल देख्नु पनि सौभाग्यको सङ्केत हो । माता लक्ष्मी कमलको फूलमा विराजमान हुनुहुन्छ। लक्ष्मीलाई प्रसन्न पार्न कमलको फूल चढाइन्छ, सपनामा कमलको फूल देखेमा भविष्यमा धन प्राप्त हुनेछ भनी बुझ्नुहोस्।

घरमा सुगा आउनु - सुगा धनको देवता कुबेरसँग सम्बन्धित छ। त्यसैगरी सुतालाई लक्ष्मी मातासँग पनि सम्बन्धित मानिन्छ । यस्तो अवस्थामा यदि तपाईंको घरमा सुगा आउँछ भने तपाईंले आफूलाई भाग्यमानी ठान्नुपर्छ किनकि सुगा तपाईंको घरबाट आर्थिक कठिनाइहरू हट्ने सङ्केत हो र तपाईंमा देवी लक्ष्मीको कृपा वर्षा हुने छ ।

घरमा उल्लुको आगमन- उल्लु लक्ष्मीको वाहन हो, त्यसैले तपाईंको घरमा उल्लु आयो वा कतै उल्लु बसेको देख्नुभयो भने तपाईंको जीवनमा रहेको आर्थिक संकटको अन्त्य हुने र भविष्यमा तपाईंको आम्दानी बढ्ने सङ्केत हो भन्ने विश्वास गरिन्छ । कुनै पनि समयमा उल्लु देख्नु धन प्राप्तिको ठूलो चिन्ह मानिन्छ।

शंखको आवाज सुन्नु- बिहान उठ्ने बित्तिकै कतै शंखको आवाज सुन्नुभयो भने यो आवाज आफ्नो आर्थिक स्थिति बलियो हुने सङ्केत हो भन्ने बुझ्नुपर्छ । शंख समुद्रबाट निस्किएको हुनाले शंखलाई अति पवित्र रत्न मानिन्छ। माता लक्ष्मीको उत्पत्ति पनि समुद्रबाट भएको हुनाले माता लक्ष्मीलाई शंखसँग सम्बन्धित मानिन्छ। -नवभारत टाइम्सबाट साभार

# अन्तरिक्ष स्टेसनमा अड्केका बुच र सुनीता घर फर्कदैं

काठमाडौं । अमेरिकी अन्तरिक्षयात्री बुच विलमोर र सुनीता विलियम्स निर्धारित समयभन्दा एक दिन अगाडि पृथ्वीमा फर्कने भएका छन् । अन्तरिक्ष स्टेसनमा केही महिना अघिदेखि अड्किएका दुई अन्तरिक्षयात्रीलाई फिर्ता ल्याउने योजना अन्तर्गत गत बुधबार उनीहरूलाई फर्काउने योजना थियो । तर, मौसम प्रतिकूल देखिएकाले नासाले एकहप्ता पछि मात्र 'स्प्ल्यासडाउन' गर्ने निर्णय गरेको हो ।

बुच र सुनी बोइङको स्टारलाइनर क्याप्सुलमार्फत् ५ जुन २०२४ मा अन्तरिक्ष स्टेसन पुगेका थिए। तर, अन्तरिक्ष स्टेसनमा पुगेपछि यो स्टारलाइनरको थ्रस्टरमा समस्या आएपछि दुवै अन्तरिक्षयात्री स्टेसनमै रोकिएका थिए ।

उनीहरूलाई पृथ्वीमा फर्काउने नयाँ योजना अनुसार ४ जना अन्तरिक्षयात्रीसहित पुगेको स्पेसएक्स ड्रागन अन्तरिक्षयान सफलतापूर्वक अन्तर्राष्ट्रिय अन्तरिक्ष स्टेसनमा डक गरिएको थियो । त्यहाँ बुच र सुनीताले नयाँ अन्तरिक्षयात्रीको स्वागत मनोरञ्जनात्मक 'एलियन एनकाउन्टर' शैलीमा गरेका थिए । जसको भिडियो अहिले विश्वभर चर्चामा रहेको छ ।

अन्तरिक्ष स्टेसनमा ४ सदस्य थप पुगेसँगै त्यहाँ रहने सदस्यको संख्या ११ पुगेको छ । नयाँ टोलीको आगमनले अघिल्लो मिसन (क्रु-९) का चार सदस्यलाई अन्तरिक्ष स्टेसनबाट पृथ्वी फिर्ता पठाउन सहज बनाउनेछ । तिनीहरू आगामी सेप्टेम्बरमा जाने अर्को ड्रागन क्याप्सुलमार्फत् पृथ्वीमा फर्कने छन् । बुच र सुनीको फिर्ती एकहप्ता पछि मंगलबार तय गरिएको छ । उनीहरूको अन्तरिक्षयानले पूर्वी समय अनुसार बिहान १ बजेर ५ मिनेटमा अन्तरिक्ष स्टेसनबाट 'अनडक' गर्नेछ र त्यसपछि पृथ्वी फर्किनेछ । नासाका प्राविधिक टोलीहरूले विभिन्न स्थानको मौसम अवस्थालाई ध्यानमा राख्दै 'स्प्ल्यासडाउन' स्थल तय गरेका छन् ।

नासाका अनुसार अन्तरिक्षयानले समुद्रमा सुरक्षित रूपमा अवतरण गर्ने लक्ष्य राखेको छ । अन्तरिक्षयान फिर्ता ल्याउन विशेष उद्धार टोलीहरू तयार अवस्थामा छन् । बोइङ स्टारलाइनर अन्तरिक्षयानको थ्रस्टरमा समस्या देखिएपछि नासाले सम्भावित मर्मत तथा परीक्षणका लागि लामो समय खर्चिनु परेको थियो ।

नयाँ अन्तरिक्षयात्रीहरूको आगमनले अन्तरिक्ष स्टेसनमा उत्साह छाएको छ । सुनी र बुचले भनेका छन् 'यो एक अद्भूत क्षण हो । नयाँ साथीलाई स्वागत गर्न पाउँदा खुसी लागेको छ । अन्तरिक्षमा यति धेरै समय बिताएपछि नयाँ अनुहार देख्न पाउनु निकै रोमाञ्चक अनुभव हो ।'

नासाका अन्तरिक्षयात्री डन पेटिटले स्टेसनमा देखिएका अद्भूत दृश्यहरू कैद गरेका छन् । उनले खिचेको टाइम-ल्याप्स भिडियोमा क्रु-१० ड्रागन अन्तरिक्षयानलाई अन्तरिक्ष स्टेसनमा डक हुँदै गरेको देख्न सकिन्छ । नयाँ अन्तरिक्षयात्रीले पनि आफ्नो यात्रा अनुभव साझा गर्दै भनेका छन्, 'यो अविश्वसनीय यात्रा थियो । यसरी पृथ्वीको परिक्रमा गर्ने अवसर प्राप्त गर्नु हाम्रो जीवनको सबैभन्दा रोमाञ्चक क्षण मध्ये एक रह्यो ।'

अन्तर्राष्ट्रिय अन्तरिक्ष स्टेसनमा गरिने सामान्य यात्राको अवधि लगभग ६ महिनाको हुने गर्छ । तर, स्टारलाइनरमा आएको समस्या र हिलियम ग्यास चुहावटका कारण बुच र सुनीको पृथ्वी फर्किने योजना बारम्बार ढिलाइ हुँदै गएको थियो ।

हालसम्म अन्तरिक्षमा सबैभन्दा लामो समय बिताउने अमेरिकी अन्तरिक्षयात्रीको कीर्तिमान फ्र्यांक रुबियोको नाममा छ, जसले सन् २०२३ मा आईएसएसमा ३७१ दिन बिताएका थिए । विश्व कीर्तिमान भने रुसी अन्तरिक्षयात्री भलेरी पोल्याकभले बनाएका छन्, उनले ४३७ दिन लगातार अन्तरिक्षमा बिताएका थिए ।

बुच र सुनीको बसाइँ यति लामो नभए पनि अप्रत्याशित रूपमा उतै अड्किनुपरेकाले व्यापक चासो र सहानुभूति सिर्जना गरेको छ । केही दिनको तयारीसहित अन्तरिक्ष गएका उनीहरूका लागि मिसन लम्बिएपछि अतिरिक्त लुगा, व्यक्तिगत सरसफाइका सामग्री र अन्य आवश्यक सामग्री पठाउनुपरेको थियो । एजेन्सीको सहयोगमा

# बेहुलीको रुप देखेर रोकियो बेहुलाको सास, अरु हेरेको हेर्‍यै !

काठमाडौं । परम्परागत विवाहमा एउटा मान्यता रहेको छ, महिलाको सौन्दर्यलाई झल्काउने मूल विषय महिलाको कपाल हुन्छ । सुन्दरताको बयान गर्न कविहरूले समेत कपाललाई विशेष स्थान दिएका छन् । 'यो रेशमी कपाल' वा 'कालो-कालो कपाल' जस्ता गीतहरूमा सुन्दर महिलालाई वर्णन गर्न कपालको महिमा जोडिएको पाइन्छ । तर, के होला जब कुनै महिलाको टाउकोमा एउटा पनि कपाल छैन र उसले विवाहमा बेहुलीको पहिरनमा प्रवेश गरेपछि बेहुलाको सास नै रोकिएला ?

भारतीय मूलकी अमेरिकी डिजिटल क्रिएटर नीहार सचदेवा जब बेहुली बनिन्, त्यही दृश्य देखियो। उनी सानैबाट एलोपेसिया एरिटाबाट पीडित थिइन् । उनले आफूलाई स्वीकार्दै बिग (नक्कली कपाल) समेत नलगाई विवाहको मण्डपमा पाइला टेकेकी थिइन् ।

बाल्यकालमै एलोपेसिया भएको कारण उनको कपाल झरेको थियो । परिवारले उनलाई बिग लगाएर टाउको ढाक्न सुझाव दिए पनि नीहारले आफैंलाई स्वीकार्दै टाउको मुण्डन गरिन् । त्यति मात्र होइन, उनको तक्लुपन कारण जिस्काउनेहरू पनि पार्टीमा आमन्त्रित थिए र उनी बिनाबिग आफ्नो सुन्दरतालाई गर्वसाथ प्रस्तुत गरिन् ।

अब, बेहुलीको पहरिनमा सिंगारिएर मण्डपमा उभिएकी नीहारलाई देख्न पाउनु सबैका लागि विशेष क्षण बन्यो । जहाँ आफ्नी सुन्दर बेहुलीलाई देखेर बेहुलाको सासै रोकिएजस्तो भयो, त्यहीँ 'गन्जी केटीसँग कसले विवाह गर्छ ?' भन्नेहरू पनि निरुत्तर भए । यसअघि पनि नीहार 'त्जभ द्यबमि द्यचयधल द्यचष्मभ' अभियानका लागि बेहुली बनिसकेकी थिइन् ।

भारतमा जन्मिएकी तर अमेरिकामा बसोबास गर्दै आएकी नीहार सचदेवाले १९ जनवरी २०२५ मा अरुण वी. गणपथीसँग विवाह गरेकी छिन् । यस जोडीले आफ्नो विवाहका खुसियाली भरिएका तस्वीर र भिडियोहरू सामाजिक संजालमा शेयर गर्दै क्याप्सनमा विवाहको विशेषता उल्लेख गरेका छन् । बिनाबिग बिहेको रातो पहिरनमा सजिएकी नीहार निकै सुन्दर देखिएकी थिइन् भने आइभोरी शेर्वानीमा रहेका अरुणको लुक राजसी देखिएको थियो ।

नीहार सचदेवाले आफ्नो विशेष दिनका लागि भारी रातो लेहङ्गा लगाएकी थिइन् । प्लीट्स डिजाइन भएको लेहङ्गामा सूक्ष्म कलाकारीका साथ एम्ब्रोइडरी गरिएको थियो । पर्ल, स्टोन, सिक्विन तथा झिलिमिली हरिया पातहरूले यसलाई थप आकर्षक बनाएका थिए । उनको ब्लाउज पनि विस्तृत आकर्षक बुट्टायुक्त भएकाले निकै भव्य देखिन्थ्यो । तर, उनले हल्का हलुका दुपट्टा बोकेकी थिइन्, जसको किनारामा पनि सूक्ष्म कलात्मक बुट्टा भरिएको थियो ।

सुन्दरताको प्रदर्शन

सबैभन्दा विशेष कुरा के रह्यो भने नीहारले आफ्नो विवाहको दिन पनि बिग नलगाई गन्जै टाउकोमा मांग भराइन् । उनले सेतो र हरियो स्टोनले बनेको गह्रौं गहना लगाएकी थिइन्, जसको मेल खाने ड्रप इयररिङले उनको सौन्दर्यता थप उज्यालो बनाएको थियो ।

दुवै हातमा लगाएका रातो चुरा, सेतो बाला र हातफूलले उनको बेहुली लुक्सलाई थप निखार दिएको थियो । उनको दुलही श्रृंगार अन्य बेहुलीहरूजस्तै अत्यन्त मनमोहक देखिन्थ्यो । एजेन्सीको सहयोगमा

# साफको खेलतालिका सार्वजनिक

काठमाडौं- दक्षिण एसियाली फुटबल महासङ्घ (साफ) यु-१९ च्याम्पियनसिप फुटबल प्रतियोगिताको खेलतालिका सार्वजनिक भएको छ । भारतको अरुणाञ्चल प्रदेशस्थित गोल्डेन जुब्ली रङ्गशालामा हुने उक्त प्रतियोगिता आगामी मे ९ देखि १८ तारिखसम्म हुनेछ । सार्वजनिक गरिएको खेल तालिका अनुसार नेपालले आफ्नो पहिलो खेल श्रीलंकासँग खेल्नेछ । उक्त खेल आगामी मे ११ तारिखमा हुनेछ । सोही दिन भूटान र बङ्गलादेशबीच पनि अर्को प्रतिस्पर्धा हुनेछ ।

विभिन्न ६ राष्ट्र सहभागी उक्त प्रतियोगितामा नेपाल समूह 'बी' मा परेको छ । समूह 'बी' मा नेपालसँगै भारत र श्रीलंका छन् । त्यसैगरी नेपालले आफनो दोस्रो खेल मे १३ तारिखमा घरेलु टोली भारतको सामना गर्नेछ । १३ तारिखमै हुने अर्को खेल माल्दिभ्स र भूटानबीच हुनेछ ।

उक्त प्रतियोगिताको समूह 'ए' मा भने साविक विजेता बङ्गलादेश, माल्दिभ्स र भूटान छन् । प्रतियोगिताको उद्घाटन खेलमा समूह 'बी' अन्तर्गतका बङ्गलादेश र माल्दिभ्सबीच प्रतिस्पर्धा हुनेछ । उद्घाटनकै दिन हुने अर्को खेलमा श्रीलंका र भारतबीच प्रतिस्पर्धा हुने जनाइएको छ ।

# आईपीएल २०२५ मा जादु देखाउन उत्सुक यी ४ ओपनर

एजेन्सी । रोहित शर्मालाई सबैभन्दा खतरनाक ब्याट्सम्यानमा गनिन्छ । यद्यपि आईपीएलको एक सिजनमा सबैभन्दा धेरै रन बनाउने रेकर्ड विराट कोहलीको नाममा छ । तर मार्च २२ बाट सुरु हुने आईपीएल २०२५ धेरै हिसाबले विशेष हुनेछ । जसरी आईपीएल १८ औं सिजनमा पुग्दै युवा हुँदै गइरहेको छ, त्यसरी नै धेरै युवा ओपनरहरू पनि आफ्नो प्रदर्शन बढाउन उत्सुक छन् । हामी तपाईंलाई कास कडीका चार यस्ता युवा ओपनिङ ब्याट्सम्यानहरूसँग परिचय गराउँछौं, जसले यस सिजनमा आफ्नो आँधीबेहरी ढङ्गले हलचल मच्चाउनेछन् ।

ज्याक फ्रेजर म्याकगर्क- अस्ट्रेलियाका २२ वर्षीय उदाउँदो ओपनरले आइपीएल २०२४ मा दिल्ली क्यापिटल्सका लागि शानदार डेब्यू गरे । आफ्नो पहिलो सिजनमा, उनले केवल १५ बलमा दुई अर्धशतक प्रहार गरे । निडर ब्याटिङमा विशेषज्ञ यी दायाँहाते ब्याट्सम्यान यसपटक पनि दिल्लीबाट खेल्नेछन् । मेगा लिलामी अघि, फ्रान्चाइजीले उनलाई ९ करोड रुपैयाँमा रिटेन गरेको थियो । फिल साल्ट- गत सिजन कोलकाता नाइट राइडर्सलाई च्याम्पियन बनाउन इङ्ल्यान्डका २८ वर्षीय ओपनर फिल साल्टले महत्वपूर्ण भूमिका खेलेका थिए । उनले २०२४ को आइपीएलका १२ खेलमा ४३५ रन बनाएका थिए । पहिलो बलबाटै प्रहार गर्ने शक्ति भएका साल्टलाई मेगा लिलामीमा रोयल च्यालेन्जर्स बैंगलोरले ११.५० करोडको भारी बोली लगाएर कोलकाताले किनेको थियो । ब्याटिङसँगै विकेटकिपिङ गर्ने साल्टले आफ्नो पुरानो लय कायम राखेमा आरसीबीले पहिलो ट्रफी जित्ने सपना पूरा गर्न सक्छ ।

इशान किशन- भारतीय टोलीबाट बाहिर रहेका इशान किशनका लागि यो सिजन धेरै महत्त्वपूर्ण छ । आफ्नो पुरानो फ्रान्चाइजी छोडेर, उनी यस सिजनबाट सनराइजर्स हैदराबादको गुलाबी जर्सीमा देखिनेछन् । काव्या मारनको स्वामित्वमा रहेको एचआरएच ले उनलाई ११.२५ करोड रुपैयाँमा मेगा लिलामीमा आफ्नो टोलीमा समावेश गरेको थियो । अभ्यास खेलमा इशानले जुन लयमा खेलिरहेको छ, त्यसले फ्यानहरूमा आशाको किरण जगाएको छ । अभिषेक शर्मा- यस सूचीको शो स्टपर भारतीय टी-२० टोलीका उदाउँदो सेन्सेसन अभिषेक शर्मा हुन् । यो युवा बायाँ हाते ब्याट्सम्यानले लामो छक्का प्रहार गर्छन् । जबसम्म उनी क्रिजमा रहन्छन्, उनी स्कोरबोर्डमा ट्याक्सी मिटर जस्तै दौडिरहन्छन् । उनले सनराइजर्स हैदराबादका लागि लगभग हरेक खेलमा विस्फोटक सुरुवात दिए । यही कारणले गर्दा टिम इन्डियामा उनको स्थान पक्का भएको छ ।

# न्यु क्यासललाई ७० वर्षपछि पहिलो उपाधि

एजेन्सी । न्यु क्यासल युनाइटेडले ७० वर्षमा पहिलो पटक घरेलु फुटबलको उपाधि जितेको छ । गत आइतबार राति भएको खेलमा लिभर पुललाई २-१ ले हराउँदै न्यु क्यासलले लिग कपको उपाधि जितेको हो ।

न्यु क्यासलका लागि पहिलो हाफमा डान बर्न र दोस्रो हाफमा अलेक्जेन्डर इसाकले गोल गरे । लिभरपुलका इलियटले इन्जुरी समयमा फ्रेडिको चेइसाले गोल गरे । गत साताको मध्यमा पिएसजीसँग टाइब्रेकरमा हारेर लिभरपुल च्याम्पियन्स लिगबाट बाहिरिएको थियो । यस अघि न्यु क्यासलले सन् १९५५ मा एफएकपको उपाधि जितेको थियो ।

## राजावादीको..

स्वार्थ पूर्ति नभएपछि एमाले त्यागेका उनी अहिले राजावादीको कित्तामा उभिएका छन् ।

उनी अहिल आफू पीडितका लागि अभियानमा लागेको भन्दै प्रसाईंले राजा स्वयं अगाडि बढेपछि उनीसँगै काम गर्ने बताए । लिङ्देन र थापालाई हलीको संज्ञा दिए । 'म ती सल्लाह दिने व्यक्तिलाई भन्छु, म गरिब, विपन्न नागरिक, उत्पीडन वर्ग, बैंकले कालोसूचीमा राखेका नेपाली व्यवसायी, गाउँका दूरदराजमा बस्ने बैंक, लघुवित्त तथा सहकारीपीडितको साथी हुँ । म कसैको हलीहरूसँग सहकार्य गर्न किमार्थ तयार रहँदिनँ । अब राजा स्वयंले बोलिसकेपछि राजसंस्थाका विषयमा अरू कसैले धेरै बोलिरहन आवश्यक छैन,' प्रसाईंले सामाजिक सञ्जालमा लेखेका थिए, 'राजा स्वयं अगाडि बढिसकेपछि अब यो आन्दोलनको लिडर स्वयं राजा नै हुनुहुन्छ । म सारथि थिएँ, छु र रहिरहनेछु । म राजासँगै मिलेर काम गर्न चाहन्छु । हलीसँग मिलेर सडक आन्दोलनमा किमार्थ जान्नँ, सबैलाई चेतना भया ।'

राजतन्त्रको एजेन्डा बोक्ने, तर गणतान्त्रिक सरकारमा पटक-पटक अवसर छोपेको भन्दै राप्रपाका नेताद्वय लिङ्देन र थापा निरन्तर आरोपित भइरहेका छन् । कतिसम्म भने कुनै समय उग्र राजावादी बनेका थापाले त २०७९ को चुनावमा मकवानपुर-१ बाट सूर्य चिह्न लिएर प्रतिस्पर्धा गरेका थिए ।

लिङ्देनले पनि एमालेकै सहयोगमा २०७४ र २०७९ मा झापा- ३ बाट निर्वाचन जितेका थिए । राजतन्त्रको मुद्दा पनि उठाउने सँगै गणतान्त्रिक शक्तिसँग स्वार्थपूर्ण चुनावी सम्बन्ध राख्ने, मन्त्री हुनेजस्ता गतिविधिका कारण पूर्वराजा पनि उनीहरूप्रति विश्वस्त नरहेको बताइन्छ । पूर्वराजाकै यस्तो मानसिकता बुझेपछि प्रसाईंले उनीहरूप्रति रोष प्रकट गरेको नेताहरू बताउँछन् ।

राजसंस्थाको माग बेलाबेलामा उठाउने गरेका राप्रपाका नेताहरूमा चरम विरोधाभाष छ । अर्कातिर उनीहरू आफैंमा चरम बेमेल छ । २०७८ मंसिरमा भएको महाधिवेशनमा थापालाई हराएर लिङ्देन अध्यक्षमा निर्वाचित भएका थिए । आफूले अप्रत्याशित हार बेहोर्नुपरेपछि थापाले त्यसको दुई महिनामै राप्रपा नेपाल पुनर्गठन गरेका थिए । पूर्व राजा ज्ञानेन्द्रको हस्तक्षेपका कारण आफूले अध्यक्षमा पराजय भोगेको भन्दै थापाले रोष प्रकट गरेका थिए । थापाले गम्भीर आरोप लगाएपछि पूर्वराजा र राप्रपा दुवैसँग उनको सम्बन्ध बिग्रिन पुगेको थियो । त्यसपछि थापाले सार्वजनिक रूपमा केही समय राजसंस्थाको वकालत पनि गरेका थिएनन् । बरु, हिन्दू राष्ट्रको पक्षमा माहोल बनाउने गरी पार्टीभित्र र बाहिर केही 'वर्कआउट' गरेका थिए ।

यसबीचमा अरू समूहले राजतन्त्रको मुद्दा नछाडेपछि थापा पनि फेरि यो मुद्दाबाट बाहिरिन सकेनन् । बरु थापाले फेरि राप्रपाको एकताको चर्चा ल्याए । एक दुईपटक दुवैले भेट पनि गरिसकेका छन् । तर, उनको प्रस्तावलाई लिङ्देनले अस्वीकार गर्दै आएका छन् । थापाले एकता चाहे पनि लिङ्देनले उनलाई रातो झण्डा देखाइरहेका हुन् ।

राप्रपामा प्रवेश गरेपछि रवीन्द्र मिश्रले खरो रूपमा राजसंस्थाको वकालत गरिरहेका छन् । यसअघि लिङ्देन र थापा दुवैले नसकेको भन्दै अब आफू ज्ञानेन्द्रको विश्वासमा अगाडि बढ्ने गरी केही कदम चाल्ने दाबी गर्दै आएका छन् । उनी सक्रिय हुन लागेको लिङ्देनलाई नै मन नपरेको नेताहरू बताउँछन् । राप्रपाभित्रै लिङ्देन र धवलशमशेर राणाबीच पछिल्लो समय विवाद बढेको छ । गत माघमा भएको केन्द्रीय समिति बैठकमा राणाले छुट्टै राजनीतिक प्रतिवेदन पेश गर्दै अध्यक्ष लिङ्देनमाथि थुप्रै प्रश्न उठाएका थिए ।

राजावादी पार्टीले गणतन्त्र मान्नेसँग चुनावी सहकार्य गरेको, मन्त्री खाएको भन्दै उनले आपत्ति जनाएका थिए । पूर्व पञ्चहरूबीच एकताको वातावरण बन्न खोजे पनि अध्यक्ष लिङ्देनका कारण सम्भव नभएको आरोप उनले लगाएका थिए । पछिल्लो समय राप्रपामा युवा नेताको रूपमा उदाएका ज्ञानेन्द्र शाही पनि चर्चामा छन् । जुम्लाबाट चुनाव जितेर आएपछि उनी खरो बोल्ने नेताको रूपमा चर्चित छन् । राजसंस्थाको मुद्दाका लागि भन्दै २०७० मंसिर ७ गते दुर्गा प्रसाईंले गरेको कार्यक्रममा शाही बल्खु पुगेका थिए । तर, शाही प्रसाईंको कार्यक्रममा गएको भन्दै राप्रपामा सिनियर नेताले नै विरोध गरेका थिए ।

'हिजो पनि राप्रपामा सूर्यबहादुर थापा, लोकेन्द्रबहादुर चन्द, पशुपतिशमशेर राणा, डा. प्रकाशचन्द्र लोहनीबीच आपसमा सम्बन्ध राम्रो भएन,' राप्रपाका एक नेताले भने, '२०४६ सालपछि सबैभन्दा बढी टुटफुट हुनेमा राप्रपा पर्छ । अहिले पनि राजसंस्था र हिन्दू राष्ट्रको मुद्दामा हामीबीच समान मत छ । तर, एक अर्कालाई मानिरहेका छैनौं ।' गणतान्त्रिक शक्तिसँग मिले पनि लिङ्देन र थापाले पुनः राजसंस्थाको अभियानमा देखिने गरी मोडिने मानसिकता बनाएका छन् । अर्थात्, पूर्वराजासँग नजिक भएर कसले उनको विश्वास जित्ने भन्ने प्रतिस्पर्धामा राजावादी दल र समूहका नेताहरू लागेको प्रस्टै देखिन्छ ।

राप्रपा प्रवक्ता मोहन श्रेष्ठ 'लार्जर इन्ट्रेस्ट'का लागि राजावादी शक्तिहरूले आफ्ना स्वार्थ त्याग्ने बताउँछन् । 'राजसंस्था पुनः ल्याउनका लागि हामीबीच उच्च समझदारी छ, हामी एक ठाउँमा उभिन्छौं,' श्रेष्ठले भने, 'लार्जर इन्ट्रेस्ट'का लागि आफ्ना स्वार्थ पनि छाड्नुपर्छ भन्नेमा हामी छौं ।'

गणतान्त्रिक शक्तिहरूले चुनावमा आएर प्रतिस्पर्धा गर्न र दुईतिहाइ मतले व्यवस्था बदल्न चुनौती दिइरहेका छन् । तर, राजतन्त्र ल्याउने भने पनि कस्तो खालको राजतन्त्र भन्नेमा राजावादी नै अलमलमा छन् । फागुन ७ गते ज्ञानेन्द्रले सम्बोधनका क्रममा 'कतै कुनै पन र पक्ष नगरी सबैलाई समेटेर जाने हाम्रो अभिलाषा हो' भनेका थिए । पहिलैकै जस्तो राजतन्त्र, कि निरंकुश राजतन्त्र वा कस्तो स्वरूपको हुने भन्नेमा राजावादीसँग स्पष्ट मार्गचित्र छैन । राजावादीले संवैधानिक राजतन्त्र, जनमत संग्रह, राजासहितको प्रजातन्त्रको कुरा गरिरहेका छन् । तर, उनीहरू नै यसमा प्रस्ट देखिँदैनन् ।

फागुन २५ गतेको जस्तै दबाब कार्यक्रम अगाडि बढाउने तयारीमा राजावादी छन् । तर, एक अर्काबीच सर्वस्वीकार्य साझा व्यक्तिले अभियानलाई जोड्न सकेका छैनन् । राप्रपाका सिनियर नेता अटाउने, सबै पार्टी र राजावादी अभियानलाई लिएर हिँड्ने साझा व्यक्तिको खोजी सबैले गरेका छन् । दल र समूहबीच यसमा पनि एकमत नभएको नेताहरू बताउँछन् । अहिलेका नेताले सबैलाई जोड्न नसक्ने भन्दै राप्रपाका पुराना नेताहरू लोकेन्द्रबहादुर चन्द र नवराज सुवेदीको समेत चर्चा भएको छ ।

चन्द पूर्व प्रधानमन्त्री भए पनि पार्टी राजनीतिमा सक्रिय नभएको वर्षौं भइसक्यो । साथै उनले अभियानमा नलाग्ने स्पष्ट गरिसकेको जनाएको छ । अर्को तर्फ सुवेदी राष्ट्रिय पञ्चायतका पूर्व अध्यक्ष समेत हुन् । सुवेदी सबैलाई स्वीकार्य हुने नेताभएको र पूर्वराजाले समेत स्वीकार्ने निकटस्थहरू बताउँछन् । साथै सुवेदीले राजतन्त्र पुनर्स्थापनाको लागि अभियान चलाउन आफ्नै संयोजकत्वमा राप्रपाका नेताहरु, राजबादी समूह र व्यक्तिहश्र सम्मिलित समितिसमेत बनाएको छ । तर सो समितिमा राप्रपा अध्यक्ष लिङ्देन र राप्रपा नेपालका अध्यक्ष कमल थापा नबस्ने तर अभियानलाई सघाउने प्रतिबद्धता आएको बताइन्छ । तर उ.यी नेताहरुबीच भने कुनै प्रकारको सहकार्य हुने अवस्था भने नरहेको सूोतको दाबी छ ।

तर राप्रपाका प्रवक्ता श्रेष्ठ भने समग्र अभियानलाई एकीकृत गरेर अगाडि बढ्ने तयारीमा रहेको बताउँछन् । 'हामी हाम्रो मुद्दामा समान मत बनाएर अगाडि बढ्ने तयारीमा छौं । यसैका लागि हामीले आइतबार पनि कार्यसम्पादन समितिको बैठक गर्‍यौं,' उनले भने, 'सबैलाई गोलबद्ध गरेर जाने विकल्पमा छलफल भइरहेको छ ।'

## मध्यपुर...

कक्ष, नगर प्रमुख, उपप्रमुख, प्रमुख प्रशासकिय अधिकृत, नगरपालिकाको विभिन्न विषयगत महाशाखा, शाखा, स्टोरलगायतको छुट्टाछुट्टै कक्ष हुनेछ ।

अपाङ्गमैत्री भवनमा दुई वटा लिफ्ट हुनेछ । भवनको बाहिरी भाग परम्परागत र मौलिक शैलीको हुनेछ भने काठका १५ वटा भन्दा बढी सँझ्या हुनेछ । नयाँ भवनमा यथेस्त खुल्ला क्षेत्र र आकर्षक उद्यान पनि हुने नगरपालिका स्रोतले जानकारी दिए ।

हाल नगरपालिकाले पुरानो र साँघुरो भवनका साथै अन्य दुई वटा भाडाको भवनबाट सेवा प्रवाह गर्दै आइरहेको छ । प्रशासनिक भवन नहुँदा सेवाग्राहीलाई विभिन्न सेवा लिनको लागि अलग अलग भवनमा जानुपर्ने समस्या रहेको र नगरपालिकाको आन्तरिक कार्यसम्पादनमा समेत असहज हुने गरेको छ । तत्कालिन अवस्थामा जग्गा नहुँदा भवन निर्माणमा केही समय लागेको जानकारी दिँदैं उनले भवन निर्माणका लागि आवश्यक जग्गा खरीद गरेको जानकारी दिए ।

## भक्तपुर...

मेडिकल वार्ड, ओपिडी सेवा, फार्मेसी, भवन निर्माण स्थल, आईसियू, सिटी स्क्यान जडान कक्ष, विभिन्न विभागका सेवाहरुको अनुगमन गर्नुका साथै अस्पतालमा भर्ना भएका बिरामीसँग प्रत्यक्ष भेट गरी अस्पतालको सेवा र सुविधाको गुणस्तरीयताका बारेमा जानकारी लिएको थियो ।

अनुगमन पश्चात मन्त्री थापाले राम्रा काम नगर्ने कर्मचारीलाई प्रदेश अन्तर्गतका १३ जिल्लाका कुनै पनि प्रादेशिक अस्पतालमा सरुवा गरिने चेतावनी दिए । उनले भक्तपुर अस्पतालमा सिटी स्क्यान मेसिन जडान भएसँगै मेमोग्राम मेशिन सञ्चालन गर्ने, उच्चस्तरीय प्रविधिसहितको आँखा उपचार सेवा विस्तार गर्ने, १०० शय्यामाथिका अस्पताललाई नर्सिङ कक्षा सञ्चालन गर्न दिइने, मापदण्ड पुरा नगर्ने अस्पतालको दर्ता, नविकरण रोक्ने, हेटौंडा अस्पतालमा मुटु रोग र भक्तपुर अस्पतालमा न्यूरोको ओटी सवासमेत सञ्चालन गरिने जानकारी दिए ।

स्वास्थ्य सचिव डा. गौतमले ३०० शय्याको सम्बन्धन पाएको भक्तपुर अस्पतालले पूर्ण शय्यामा सेवा सञ्चालन नगरे शय्या घटुवा गरिने र पाँच वर्षका लागि भनेर दिएपनि १३ वर्षदेखि सञ्चालित मानव अङ्ग प्रत्यारोपण केन्द्रलाई भवन छाड्न पत्राचार गर्न निर्देशन दिए । उनले भक्तपुर अस्पताल क्षेत्रभित्र साझा आषधि पसल ल्याउन रोक लगाउनुपर्ने बताए ।

प्रदेशसभा सदस्य सुरेश श्रेष्ठले विगत दईवषदेखि देशकै उत्कृष्ट अस्पताल घोषित हुन सफल भक्तपुर अस्पतालको गुणस्तरीय सेवालाइ निरन्तरता दिनुपर्नेमा जोड दिए । अस्पताल विकास एवं व्यवस्थापन समितिका अध्यक्ष शशिजङ्ग थापाले अस्पतालले सञ्चालनमा ल्याउन लागको क्याबिनको सङ्ख्या चारबाट १० मा पुर्‍याउन मन्त्रालयलाई सहयोगको आग्रह गरे । अस्पतालका कार्यकारी निर्देशक डा. सुरेन्द्र भट्टले अस्पतालमा दैनिक एक हजार देखि एक हजार १०० सम्म बिरामी सेवा लिन आउने गरेको जानकारी दिए ।

## कांग्रेस...

उनको भनाइ छ । नेपाली कांग्रेस र नेकपा एमाले भित्रका इमान्दार एवं सच्चा समाजवादी नेता कार्यकर्तालाई साथमा लिन सक्नुपर्नेमा पनि उनले जोड दिएका छन् ।

राजावादीहरुका आन्दोलनलाई अवसरको रुपमा लिनुपर्ने पनि उनले बताएका छन् । यथास्थितिवादी दलहरुले गणतन्त्रलाई बुर्जुवा गणतन्त्रमै सीमित गर्दा जनताले सोचेको परिवर्तन प्राप्त नभएको र मौकाको फाइदा उठाउँदै प्रतिगामीले त्यसलाई उल्ट्याउन प्रयास गरेका उल्लेख गर्दै अध्यक्ष प्रचण्डले प्रतिगामीलाई थप धक्का दिँदै जनगणतन्त्र र समाजवादमा पुग्न यो अवसर पनि हुनसक्ने उद्घोष गरे ।

कतिपयले राजावादीको हर्कतले माओवादी डराएको भन्ने भाष्य बनाउन खोजेको भन्दै अध्यक्ष प्रचण्डले दलाल, बिचौलिया र बाहिरी शक्तिले बनाएको काँग्रेस एमालेको दुई तिहाइको सरकारसंग लडिरहेको माओवादी हार व्यहोरेका सीमित राजावादीसंग डराउनुपर्ने कारण नभएको दावी गरेका छन् ।

चैत १५ गते राजधानीमा गर्ने जनप्रदर्शन पनि पूर्व निर्धारित कार्यक्रम भएको र त्यसको समय मात्र केहि दिन अघि सारिएको प्रचण्डले प्रष्ट पारे ।

तराई मधेश जागरण अभियानमा झापा देखि रौतहटसम्म पुग्दा लाखौ जनताले देखाएको मायाले जनयुद्धको झल्को दिएको र आफू उत्साहित भएको उनको भनाइ छ ।

आफू नेतृत्वको अघिल्लो सरकारले सुशासन र भ्रष्टाचार बिरुद्ध रेकर्ड बनाएको बताउँदै पूर्व प्रधानमन्त्री एवं पार्टी अध्यक्ष प्रचण्डले त्यसकै कारण पार्टीप्रति जनलहर बढेको र वर्तमान सरकारको जनविरोधी र भ्रष्ट व्यवहारले जनतालाई अझै माओवादीको नजिक ल्याइदिएको विश्लेषण गर्दै अध्यक्ष प्रचण्डले जनताको घरमा गएर संगठन बनाउन आम कार्यकर्तालाई निर्देशन समेत दिए ।

माओवादी जनतामा गएको मन नपराउनेहरुले माओवादी सरकारमा जाँदैछ भन्ने हौवा फैलाएका र त्यसमा सत्यता नभएको पनि अध्यक्ष प्रचण्डले प्रष्ट पारे ।

भक्तपुरको राजनीतिबारे टिप्पणी गर्दै पूर्व प्रधानमन्त्री समेत रहेका अध्यक्ष प्रचण्डले नेमकिपाका अध्यक्ष नारायणमान बिजुक्छें रोहितको प्वाँख पलाएको टिप्पणी गरे । राजसंस्थाबारे उनको सार्वजनिक भिडिओले नेमकिपाको राजनीति धरापमा परेको र भक्तपुरले अब बैकल्पिक नेता खोजेको अध्यक्ष प्रचण्डले बताए । भक्तपुरमा कम्युनिष्ट भनिएका नेमकिपा र नेकपा एमाले दुबैलाई जनताले हेरिसकेकाले जनताको वास्तवविक मित्र माओवादी केन्द्रको नजिक आउँन खोजिरहेका दावी गर्दै अध्यक्ष प्रचण्डले संगठन निर्माणमा ध्यान दिन नसके पुरानै दलहरुले जनतालाई झुक्याइरहनेतर्फ सचेतसमेत गराए ।

सो अवसरमा पार्टी सचिव एवं बागमती प्रदेश इन्चार्ज हितमान शाक्य, भक्तपुर जिल्ला ईन्चार्ज दिलिप प्रजापति भिष्म, केन्द्रीय सदस्यहरु देवेन्द्र श्रेष्ठ, डिपी ढकाल र रामप्रसाद सापकोटा दीपशिखा लगायतले समसामयिक राजनीतिबारे प्रशिक्षित गरेका थिए ।

जिल्ला संयोजक सुनिल गोठे बासुको अध्यक्षतामा सम्पन्न प्रशिक्षण कार्यक्रममा केन्द्रीय सदस्यहरु गोविन्द आचार्य, विष्णु सापकोटा जुगल, प्रतिमा श्रेष्ठ, उमा कपाली, इन्दिरा अधिकारी लगायतको समेत उपस्थिति रहेको सचिव जीवन तजले जानकारी गराए । कार्यक्रममा जिल्ला, नगर र वडा कार्यसमितिका साथै जनवर्गीय संगठनका पदाधिकारीहरु समेत सहभागी रहेका बताइएको छ ।

## राजा...

तथ्याङ्कहरुले २००७ सालको क्रान्तिपूर्व नेपाल विश्वकै दोस्रो पछौटे मुलुक भएको बताउँछ । त्यसका लागि प्रमुख भूमिका नै नेपालका राजा र राणाहरूको छ ।

हिजो माओवादी जनयुद्ध हुँदै गर्दा बयलगाडा चढेर अमेरिका पुगिँदैन भन्दै जनआन्दोलन कमजोर पार्न खोज्ने वर्तमान प्रधानमन्त्री केपी शर्मा ओलीको कार्यशैली गणतन्त्र सुव्यवस्थित नहुनुको अर्को मुख्य कारण हो । शासकको हातमा देश सुम्पिएपछि देशको हालत यस्तो नभए कस्तो हुन्छ ? माओवादी जनयुद्धकै कारण गणतन्त्र आएको हो भन्नेमा दुबिधा छैन । कांग्रेस एमाले तत्काल कार्यनीतिक नारा बनाउनुपर्छ भन्ने थिएन । कांग्रेस सैद्धान्तिक ढङ्गले राजतन्त्रसहितको प्रजातन्त्र भन्थ्यो । एमालेले तत्काल देशमा गणतन्त्र सम्भव छैन भन्थ्यो ।

लोकतान्त्रिक गणतन्त्रको रक्षकको आवश्यकता छ देशमा, निरङ्कुश राजसंस्थाको होइन । दलहरूको विलासी जीवनशैलीका कारण कतिपय नागरिकहरूले राजाप्रति थप मोह देखाएपछि राजनीतिक दलहरूले विभिन्न टिकाटिप्पणी गर्ने गरेका छन् । यद्यपि विश्लेषकहरू दलहरूले लडेर ल्याएको व्यवस्था संस्थागत हुन नसक्दा नागरिकमा चरम निराशा हुनु स्वाभाविक भएको टिप्पणी गर्छन् ।

खासगरी समाजमा तीनथरी प्रवृत्ति हुन्छन् । एउटा अग्रगामी सोच विचार भएका शक्ति जो सङ्ख्यामा थोरै हुन्छन् । उनीहरू इतिहासमा अग्रगामी इन्जिनको काम गर्छन् । अर्को सानो शक्ति ५-१० प्रतिशतसम्मका हुन्छन् । त्यो शक्ति आजभन्दा हिजोको ठिक थियो भनेर पुरानो शक्तिको महिमा मण्डन गरेर बस्ने पुरानै अवस्थातिर फर्काउन खोज्ने हुन्छन् ।

ती पुरानो सामन्तवादी सोच राख्ने पुरानो शक्तिबाट फाइदा लिएकाहरू अत्यन्तै अल्पचेतना भएका रूढिवादी चिन्तन भएका मान्छेहरू हुन्छन् । अर्को सबैभन्दा ठूलो पङ्क्ति ७०-८० प्रतिशत ढुलमुल मध्यमार्गी खालका हुन्छन् । यो शक्ति अग्रगामी शक्ति बलियो भएमा अग्रगामीको पक्षमा लाग्छन् । पश्चगामी शक्ति हाबी भए जस्तो देखिए उतैतिर लाग्छन् ।

महत्वपूर्ण कुरा के हो भने लोकतान्त्रिक गणतन्त्र साधन हो । साध्य भनेको जनताको सुख, समृद्धि, प्रगति, उन्नति र खुसियाली हो । नेपालमा लोकतन्त्र ढिलो गरी आयो । आर्थिक क्रान्ति पूरा हुन नसकेकाले धेरै जनसंख्या बेरोजगारी, गरिबी, पिछडिएर पिल्सिएको छ ।

देशमा भएका युवाको पङ्क्ति विदेश जान बाध्य छ । देशभित्र शिक्षा, स्वास्थ्य, सामाजिक सुरक्षा जस्ता आधारभूत आवश्यकता प्रत्याभूत गराउन सकिएको छैन । वर्गीय, जातीय, क्षेत्रीय, लैङ्गिक विभेद अहिले विभिन्न रूपमा कायम छन् । जसका कारण जनता असन्तुष्ट हुनु स्वाभाविक हो । देशमा भएको परिवर्तनले छिटो परिणाम दिनुपर्ने थियो । त्यो अपेक्षा पूरा नहुँदा जनतामा निराशा छाएको छ ।

क्रान्तिकारीको ठूलो तप्का फेरि यथास्थितिवादीमा बदिलन्छन् । ठूला दल भनिएका कांग्रेस, एमाले पछिल्लो समय मूल नेतृत्व क्रान्तिकारी नेतृत्वबाट विमुख हुँदा अलि सत्तालिप्सा हुन पुग्यो ।

त्यसले गर्दा गणतन्त्रभन्दा हिजो राम्रो हो कि भन्ने शक्तिलाई बल पुगेको छ तर कमीकमजोरीलाई सच्याएर अघि बढ्ने प्रयास आवश्यक छ । लोकतन्त्रको विकल्प अझ उन्नत खालको लोकतन्त्र हो । गणतन्त्रको विकल्प अझ परिमार्जित जनतालाई सुख समृद्धि प्रत्याभूत गराउने गणतन्त्र हो, राजतन्त्र होइन, राजसंस्था होइन । खबरहब

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# चलचित्र कलाकार संघको २०औं साधारणसभा सम्पन्न

काठमाडौं । नेपाल चलचित्र कलाकार संघको २० औं साधारण सभा सम्पन्न भएको छ । सो अवसरमा विभिन्न कलाकारहरुका साथै पत्रकारसमेतलाई सम्मान प्रदान गरिएको छ । चलचित्र विकास बोर्डका अध्यक्ष दिनेश डिसीको प्रमुख आतिथ्य सम्पन्न भएको समारोहमा पत्रकार कृष्ण भट्टराईलाई चलचित्र पत्रकारिता सम्मान प्रदान गरिएको हो । समारोहमा अभिनेता तथा चिकित्सक डा.रुपक घिमिरे, अभिनेता धिरेन शाक्य, कलाकार गीता अधिकारी, अभिनेत्री अनु शाह तथा एयरसेल ट्राभललाई पनि सम्मान गरिएको सथो । सम्मानित व्यक्तित्वहरुलाई प्रमुख अतिथि डिसी, कार्यक्रमका सभापति कलाकार संघका अध्यक्ष मोहन निरौला, पूर्व अध्यक्ष रविन्द्र खड्का, फिल्म सोसाइटीका अध्यक्ष कृष्ण मल्ल, चलचित्र कल्याणकारी कोषकी अध्यक्ष वसुन्धरा भुसालसहितले सम्मानित गरेका हुन् ।

संघका केन्द्रिय सदस्य तथा लोकप्रिय हास्य अभिनेता गोपाल ढकाल 'छन्दे' द्वारा सञ्चालित उक्त समारोहमा २०७८ सालको नेपाल चलचित्र कलाकार संघ पुरस्कार चरित्र अभिनेता मुकुन्द किशोर भट्टराईलाई, २०७९ सालको नेपाल चलचित्र कलाकार संघ पुरस्कार चरित्र अभिनेता लय संग्रौला तथा २०८० सालको नेपाल चलचित्र कलाकार संघ पुरस्कार अभिनेता पुरण जोशीलाई प्रदान गरिएको थियो । पुरस्कारको राशी जनही ७५,००० रहेको छ ।

यसैगरी अभिनेत्री गौरी मल्ललाई छप्पन्न हजार रुपैयाँ राशीको 'स्व.शान्ति मास्के स्मृती पुरस्कार' प्रदान गरिएको छ । मातृशोकको पीडामा रहेका कारण अभिनेत्री मल्ल समारोहमा उपस्थित भइनन् । समारोहमा दश हजार रुपैयाँ राशिको स्व. गोपाल राउत स्मृति पुरस्कार कलाकार रामकाजी घिमिरेलाई प्रदान गरियो ।

सो समारोहमा संघका महासचिव सबिन श्रेष्ठले स्वागत मन्तव्य राखेका थिए भने प्रमूख अतिथि डि सि ले चलचित्र विकास बोर्ड हरेक क्षण कलाकारिताको प्रतिष्ठा बृद्धिमा लागिरहने प्रतिबद्धता व्यक्त गर्दै नेपालको चलचित्र जगतलाई उपयोगी हुने हरेक कार्यमा दत्तचित्त भइ अघि बढिरहने बताए ।

# कर्मा कलाकारका दाबी : नयाँ स्वादको फिल्म

काठमाडौं । चलचित्र 'कर्मा'का कलाकारले यो नेपाली रजतपटमा आइरहेका चलचित्रभन्दा फरक रहेको दावी गरेका छन् । स्टोरी र न्यारेसन दुबैका हिसाबले 'कर्मा' आइरहेका भन्दा फरक रहेको दाबी गरेका छन् । "यो आइरहेका चलचित्रभन्दा फरक छ । अहिले रेगुलर रुपमा आइरहेका चलचित्रभन्दा फरक छ," मुकुन भुसाल भन्छन्, "निर्देशकले स्टोरी फरक तरिकाले प्रस्तुत गर्नुभएको छ । स्टोरी फरक तरिकाले न्यारेट गर्नुभएको छ ।"

हरेक कलाकार र निर्देशकले रिलिजअगाडि आफ्नो चलचित्र फरक रहेको बताउने गरे पनि 'कर्मा' भने साँच्चै नै फरक रहेको उनको भनाइ छ । स्टोरी, मेकिङ र न्यारेसन नै फरक हुँदा चलचित्र आइरहेका रेगुलर भन्दा फरक रहेको उनको भनाइ छ । त्यसैले कर्माप्रति आफूलाई पूर्ण विश्वास रहेको उनको भनाइ छ । विपीन कार्कीले आफूलाई एक्सन जनरामा पनि तयारी गरेर काम गरेको मुकुनले बताए । "विपीन कार्कीलाई मेकरले जसरी विश्वास गरेर लिनुभयो, त्यसैगरी उहाँले पनि मेहनत गरेर काम गर्नुभयो," मुकुन भन्छन्, "मेहनतकै कारण टिजरमा उहाँले वाहीवाही कमाउनु भएको छ ।"

कलाकार दिव्यदेबले अहिलेसम्म हरेक क्यारेक्टरमा विपीनले मेहनत गरेको बताए । "हरेक सिनेमामा उहाँले फरकफरक क्यारेक्टरमा आफूलाई प्रुभ गर्नुभएको छ । यसमा पनि मेहनतले काम गर्नुभएको छ," दिव्यदेव भन्छन्, "मेकरमा मात्र होइन दर्शकमा पनि त्यही छाप परिसकेको छ । जुनसुकै क्यारेक्टर पनि उहाँले मेहनत गरेर राम्रो गर्नुहुन्छ भन्ने भइसकेको छ । यसमा पनि उहाँले प्रुभ गर्नुभएको छ ।"

सरिता गिरीले निर्देशक सौरभ चौधरीले आफूलाई सिनेमामा आमा होइन क्यारेक्टर चाहिएको भनेर अफर गरेको स्मरण गरिन् । "उहाँले अफर गर्दाको यो लाइनले नै मलाई टच गरेको थियो," उनले भनिन्, "चलचित्रमा क्यारेक्टर पनि त्यस्तै छ ।" आफूले अहिलेसम्म थुप्रै चलचित्रमा आमाको रोलमा काम गरे पनि 'कर्मा'मा भनेर फरक खालको चरित्र रहेको बताइन् । "आमाको चरित्र त अहिलेसम्म धेरै गरेँ होला । तर, कर्मामा आमाको चरित्र मात्रै छैन," उनी भन्छिन्, "यसमा आमासँग सँगै धेरै कुरा छ । यसमा निर्देशकले यो क्यारेक्टरलाई यसरी चलाउनुभयो, अहिलेसम्म चलेको आमाको ट्यागलाइन यो चलचित्रले हटाउनेछ ।"

निर्देशक चौधरीले जतिसुकै गलत काम गरे पनि त्यसलाई भाग्यले सजाय दिने बताए । "कसैले गलत काम गरेर म बाट तारिफ पाइरहेको छ भने पनि कुनै न कुनै समय अर्को कसैबाट उसले त्यसको मूल्य चुकाउनुपर्छ," उनी भन्छन्, "यही नै कर्मा हो । यसमा विश्वास गर्ने भएकैले मैले यो चलचित्र बनाएको हुँ । त्यसैले म भन्छु, सबैको राम्रो गरौं ।" कसैले मसँग नराम्रो गर्यो भने उसलाई मैले नराम्रो गर्न नसके पनि अर्कोले उसलाई नराम्रो गरेर ब्यालेन्स गर्ने उनको भनाइ छ । नायिका उपासना सिंह ठकुरीले आफूलाई 'कर्मा'प्रति सधैं विश्वास रहेको बताएकी छन् । त्यसैले यसमा एक्सन भूमिकामा काम गर्ने विपीन कार्कीप्रति पनि विश्वास रहेको बताइन् ।

एक्सन गर्ने नायकको अपोजिटमा रहे पनि आफू भने 'कर्मा'मा एक्सन भूमिकामा नरहेको स्पष्ट पारिन् । तर, एक्सन सिनेमामा काम गरिरहँदा आफूलाई पनि एक्सन सिनेमामा काम गर्ने रहर भने पलाएको र त्यसको अफरको अपेक्षा रहेको बताइन् । चलचित्रमा विपीन कार्की, उपासना सिंह ठकुरी, मुकुन भुसाल, दिब्यदेब, सरिता गिरी, बेन बस्नेत, सुज्यान सिलवाल, अनिल बुढाथोकी, निर्मल शर्मालागायतको पनि अभिनय रहेको छ ।

नयाँ वर्ष २०८२ को छेको पारेर चलचित्र 'कर्मा' आगामी चैत २९ गते रिलिज हुँदै छ । नेपाल र विदेशमा यो चलचित्र एकसाथ प्रदर्शन हुनेछ । एक्सन जनरामा निर्माण भएको 'कर्मा' ड्रामा, सस्पेन्स र एक्सन जनरामा निर्माण भएको छ । सिनेमाको कथा निर्देशक चौधरी स्वयंले लेखेका छन् । 'कर्मा'ले अन्तर्राष्ट्रिय प्रदर्शन अधिकार बिक्रीको अधिकार सेभेन सिज सिनेमाले लिएको छ । यो चलचित्रमा भाष्कर स्वाँरको संगीत निर्देशन, कविराज गहतराजको कोरियोग्राफी, श्री श्रेष्ठको द्वन्द्व निर्देशन र निमेष श्रेष्ठको सम्पादन छ ।

तारानाथ न्यौपाने मुख्य सहायक निर्देशक रहेको सिनेमामा समीर मियाको भिएफए, उत्तम न्यौपानेको व्याकग्राउण्ड स्कोर, शाहिल खानको टिजर-ट्रेलर, विजय बाश्यालको पब्लिसिटी डिजाइन र राजेन्द्र मोक्तान कलरिस्ट रहेका छन् । आर्टिस्टिक इनटरटेनमेन्टको प्रस्तुति रहने 'कर्मा' मा वसन्त लम्सालको लगानी रहेको छ ।

# राजागंज : महिला पात्रहरूको स्वाभिमानको कथा

OFFICIAL TRAILER
POOJA, SIR
राजागंज
IN CINEMAS
चैत १ गते
14 MARCH
A FILM BY DEEPAK RAUNIYAR

काठमाडौं । नेपाली चलचित्र 'राजागंज'ले उत्पीडनमा परेको समुदायका महिलाको सम्मान, बहादुरी र संघर्षलाई चित्रण गर्दै आत्मसम्मानको विषयलाई जोडदार ढंगले स्थापित गर्ने जमर्को गरेको छ । चलचित्रको कथा मूलत: महिला पात्रहरूको वरिपरि घुम्छ । पहिलो पात्र - बहादुर र सबल क्विर (लेस्बियन) महिला प्रहरी अधिकारी पूजा, जसले आफ्नो कर्तव्यलाई निष्ठापूर्वक पूरा गर्छिन् । दोस्रो - उत्पीडन र अन्यायमा परेकी मधेसी महिला सरस्वती, जसले परम्परागत रूपमा चित्रण गरिने निरिह महिलाको भाष्यलाई चिर्दै अनपेक्षित तवरबाट आफूले भोगेको अन्यायको प्रतिशोध लिन्छिन् ।

हिरासतभित्र मारिने विशेषत: मधेसी दलित युवाहरूको फेहरिस्त निक्कै लामो छ । यस अर्थमा रौनियारका कुनै पनि दृश्य विम्बात्मक हिसाबमा कमजोर छैनन् । प्रत्येक दृश्यले केही न केही गम्भीर सन्देश छोडेको देखिन्छ ।

तेस्रो पात्र - मधेसी महिला प्रहरी अधिकारी ममता, जसले प्रहरी व्यवस्थाभित्र अन्यायको सामना गर्दैगर्दा पनि त्यसको प्रतिरोध गर्ने प्रयास गर्छिन् र कर्तव्य निर्वाह गर्छिन् । अनि यी तीन महिलाहरूको प्रतिपक्षमा उभिएकी अर्की चौंथो महिला पात्र छिन्, जसको सामाजिक, जातीय, र राजनीतिक पृष्ठभूमि विशेषाधिकारयुक्त छ । उनले नेपाली समाजमा रहेको संरचनागत विभेदको प्रतिनिधित्व गर्छिन् ।

यो कथा यिनै महिला पात्रहरूको स्वाभिमानको कथा हो । समग्रमा भन्नुपर्दा यसको मूल विषय भनेको महिलाको आत्मस्वाभिमान र गरिमाको हो । तर, त्यो स्वाभिमान या गरिमा परम्परागत ढंगको फगत नारी हुनुको आत्मसम्मान होइन बरु आमनागरिक हुनुको स्वाभिमान हो । त्यसैले त यसकी एक प्रमुख पात्र 'पूजा, सर'ले आफूलाई म्याम भनेर बोलाउँदा आपत्ति जनाउँछिन् र पदीय सम्बोधनमा नै आफूलाई सहज महसुस गर्छिन् । अर्की पात्र सरस्वतीले 'के लाग्छ, एक मधेसी महिलाले अपहरण गर्न सक्दिनन् ?' भन्दै गर्दा यस्तो लाग्छ, परम्परागत रुपमा स्थापित दाइजो र घरेलु हिंसा पीडित मधेसी महिलाको निरिह चित्रणलाई निर्देशक दीपक रौनियारले स्पष्टसँग चिरिदिएका छन् ।

सरस्वती मात्र होइनन्, मधेश आन्दोलनको पृष्ठभूमिमा बनेको यस सिनेमामा अर्की एक मधेसी महिलाले गाडीमाथि चढेर पटक-पटक माइकमा बोल्दै गरेको देखाइएको छ । यो एक उदाहरण मात्र हो । यसले नेपालको समसामयिक महिलाहरूले परम्परागत रूपमा सार्वजनिक भूमिकामा हावी रहेका पुरुषहरूलाई कसरी चुनौती दिइरहेका छन् भन्ने स्पष्ट पार्छ ।

क्षमता हुँदाहुँदै पनि, अनि आफ्नो गल्ती नहुँदा-नहुँदै पनि, प्रहरी निरिक्षक ममता गुप्ताले भोगेको प्रहरी विभाग भित्रकै विभेद र अन्यायले मूलत: हाम्रा संस्थाको अकर्मण्यता मात्र देखाउँदैन, बरु भर्खरै मैथिली मूलकी महिला उपसचिवले भोगेको उपेक्षा र अन्यायलाई पनि उजागर गर्छ । अरुभन्दा क्षमतावान् र अब्बल हुँदाहुँदै पनि सार्वजनिक सेवाका क्षेत्रमा कसरी मधेसी महिला उपेक्षित हुँदै आएका छन् भन्ने ज्वलन्त उदाहरण प्रस्तुत गर्छिन उनी । इमान्दार व्यक्तिलाई बलीको बोको बनाउने नेपाली सार्वजनिक प्रशासनको चरित्र हो यो ।

कतिपय क्षेत्रमा, अब्बलता र सहभागिता दुवैका हिसावमा महिलाले पुरुषलाई निक्कै पछि धकेलिसकेको अवस्था छ । तर, नेपाली महिलाको यो उपलब्धिलाई सिनेमाले न्यायोचित ढंगले देखाउन भने चुकिरहेका थिए । दृष्टिकोणको यो अभावलाई नि:सन्देह 'राजागंज'ले केही हदसम्म भएपनि पुरा गरेको छ । नाङ्गो खुट्टा हिरासतभित्र राखिएको थुनुवाले जुत्ताको तुनामा झुण्डिएर 'आत्महत्या' गरेको केसलाई लिएर ममतालाई निलम्बन गरिन्छ । यो दृश्य मधेसका हिरासतभित्र बारम्बार दोहोरिरहने वास्तविक दृश्य हो । हिरासतभित्र मारिने विशेषत: मधेसी दलित युवाहरूको फेहरिस्त निक्कै लामो छ । यस अर्थमा रौनियारका कुनै पनि दृश्य विम्बात्मक हिसाबमा कमजोर छैनन् । प्रत्येक दृश्यले केही न केही गम्भीर सन्देश छोडेको देखिन्छ ।

अपहरणकारीले 'कुहिएको आँप'को र 'ताजा आँप'को मूल्यको हिसाबबीच तुलना गर्दै अपहरित बालक (जो पहाडिया मुलकी महिलाको बच्चाको प्रतिनिधित्व गर्छन)को फिरौती निर्धारित गर्छिन्, यसले केवल लाक्षणिक रुपमा तत्कालिन प्रधानमन्त्रीको मधेशद्वेषी अभिव्यक्ति मात्र बोक्दैन, यो तुलना अपहरणकारी महिलाको जबरजस्ती तुहाइएको कोख र अपहरित बालकको मुल्यबीचको पनि हो । समग्रमा यहाँको राज्यसत्ताले मुलधारमा पहाडिया खस-आर्यन र अन्य सम्प्रदायका मानिसहरुबीच दर्शाउँदै आएको विभेदकारी मूल्य पनि हो ।

यो फिल्मको अर्को महत्वपूर्ण पक्ष भनेको सबै सीमान्तकृत वर्ग, समुदायका महिलाहरूको एकताको प्रस्तुति हो । एक उत्पीडित मधेसी महिलाहरूको पीडालाई एक समलिंगी महिला प्रहरी अधिकारीले बुझ्छिन् । सुरुमै उनले पनि अर्को समुदायको उत्पीडनलाई आत्मसात गर्न सक्दिनन्, बरु यसका लागि उनी आफै त्यस समुदायमा घुलमिल हुनुपर्छ । अन्तर समुदायबाट आएका पात्रहरुको अन्तरघुलनलाई क्यामेराको फ्रेमिङ र आन्दोलनको बीच भागबाट खिचिएका सटहरुले पनि देखाउन खोजेको छ ।

पृष्ठभूमिमा अरु कोही न कोही पात्रहरु पनि देखिइहाल्छन् । सायद यो सीमान्तकृतलाई प्रस्तुत गर्ने निर्देशकको शैली हुनुपर्छ । सबै सीमान्तकृतलाई एउटै मालामा गाँस्ने प्रयास हुनुपर्छ । जसको अर्थ, सबै प्रकारका उत्पीडनविरुद्ध लड्न सबै खाले उत्पीडितहरूको एकता अपरिहार्य छ भन्ने अत्यावश्यक सन्देश यस सिनेमाले दिने प्रयत्न गरेको छ । यसरी, 'राजागंज' नेपाली समाजमा निहित लैंगिक विभेद, संरचना र बदलिँदो शक्ति सन्तुलनलाई बुझ्नका लागि उत्कृष्ट उदाहरण हो ।

हाल नेपाली चलचित्र उद्योगमा जातीय/सांस्कृतिक पहिचान झल्काउने चलचित्रहरू लोकप्रिय भइरहेका छन् । तर, मधेश आन्दोलनको पृष्ठभूमिमा आधारित भए तापनि दीपक रौनियार निर्देशित यस फिल्मले सामुदायिक पहिचानमा मात्र केन्द्रित नभई विभिन्न समुदायका अनुहारहरूलाई एउटै कथासूत्रमा बाँध्दै हाम्रो राष्ट्रिय पहिचानलाई उजागर गर्ने प्रयास गरेको छ ।

समग्रमा भन्नुपर्दा, महिला स्वाभिमानको कथा भन्दै गर्दा 'राजागंज'ले नेपाली सिनेमामा गरिने परम्परागत महिला चित्रणलाई चुनौती दिनुका साथै नेपाली महिलाहरूले गरेको सामाजिक, शैक्षिक र राजनीतिक फड्कोलाई न्यायसंगत रुपमा प्रस्तुत गरेको छ । तर, नेपाली महिलाको यो उपलव्धिलाई सिनेमाले न्यायोचित ढंगले देखाउन चुकिरहेकामा नि:सन्देह 'राजागंज'ले केही हदसम्म पुरा गरेको छ ।











प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक




वर्ष १८ अङ्क ३० ने.सं. ११४५ चिल्लागा द्वादशी चैत्र १३ गते बुधबार, २०८१ 25 March 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## कुलमानको बहिर्गमनमा नेताहरुको दोहोरा चरित्र विरोधका लागि मात्र विरोध !



काठमाडौं । अहिल नेपाली कांग्रेस र नेकपा एमालेसहितको ठूला दलको दुई तिहाईको सरकार कायम छ । शक्तिशाली सरकार भएपनि आम नागरिकका असन्तुष्टिलाई सम्बोधन गर्न नसकेको र आम नागरिकमा सरकार प्रतिको असन्तुष्टि बढ्दै गएको समयमा सरकार जनताका चाहना विपरित एक पछि अर्को जनभावना विरोधी कार्य गर्न लागिपरेको छ । अहिले नेपाली जनताले अत्याधिक रुचाइएका र जनमानसमा उज्यालोका नायकको रुपमा छबी बनाउन सफल नेपाल विद्युत् प्राधिकरणका कार्यकारी निर्देशकबाट कुलमान घिसिङलाई हटाएपछि कांग्रेस-एमाले गठबन्धन सरकार बिचौलियाले चलाएको पुष्टि भएको आमबुझाइ छ ।

सोमबार बसेको मन्त्रिपरिषद् बैठकले विद्युत् प्राधिकरण प्रमुखबाट घिसिङलाई हटाएर हितेन्द्रदेव शाक्यलाई नियुक्त गरेको थियो । कांग्रेसका तर्फबाट ऊर्जामन्त्री रहेका दीपक खड्काको पटक-पटकको प्रयासपछि सरकारबाट उक्त निर्णय गराउन उर्जा मन्त्री सफल भएका थिए । उनले यस अघि पनि पटक पटक कुलमानलाइ हटाउन प्रयास गरेका थिए, तर सफ हुन सकेको थिएन । अन्तत उनले मन्त्री परिषद्को निर्णयबाट हटाउन सफल भएकोमा यस निर्णय प्रति आम नागरिक तथा स्वयं सत्ता पक्षकै सासदहरु सामाजिक सञ्जाल मार्फत आपत्ति जनाउँदै सरकारको चर्को आलोचना गरेका छन् ।

विश्वव्यापी रुपमा संसदीय मान्यताविपरीत एकसाथ सत्ताको भऱ्याङ उक्लिएका कांग्रेस-एमाले सरकारप्रति सुरुदेखि नै आम जनसमुदायमा असन्तुष्टि व्यक्त हुँदै आएको थियो । अहिले घिसिङलाई हटाउने निर्णयपछि सरकार झन् चौतर्फी घेराबन्दीमै परेको छ । त्यो पनि केही समय पछि अर्थाच ३ महिना पछि पदावधि सकिन लागेका प्राधिकरणका निर्देशकलाई हटाउन मरिहत्ते गर्नु उर्जा मन्त्री र सरकारकै लासगसमेत लज्जाको विषय रहेको राजनीतिक विश्लेषकहरुको छ ।

आफ्नै कार्यसम्पादन मूल्यांकनमा 'आफैं फेल' भएको सरकारले 'शतप्रतिशत अंक ल्याउने' घिसिङलाई हटाएर 'जनआक्रोशको आगोमा घ्यू थप्ने काम' गरेको देखिन्छ । सरकारको यो कदमपछि अहिले सर्वत्र विरोध भइरहेको छ । यसको सत्तापक्षका नेता, कार्यकर्ता, कलाकार, पत्रकार, नागरिक आगुवादेखि सर्वसाधारणसम्म सरकारप्रति आक्रोशित छन् । यो आक्रोश

बाँकी पेज ७ मा

## समाजलाई नि:स्वार्थपूर्वक सेवा गर्ने नयाँ पुस्ता तयार गर्नु कलेजहरूको उद्देश्य हुनुपर्ने




भक्तपुर । ख्वप माध्यमिक विद्यालय, ख्वप कलेज, शारदा क्याम्पस मा.वि. र ख्वप कलेज अफ ल मा कार्यरत शिक्षक तथा कर्मचारीहरूको भेला सोमबार सम्पन्न भयो । अन्तर्राष्ट्रिय श्रमिक दिवसको सन्दर्भ पारेर समसामयिक विषयमा जानकारी दिने उद्देश्यले भएको उक्त कार्यक्रममा नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छें (रोहित) ले हरेक घटना र विचारलाई व्यापक दृष्टिकोणले हेर्नु जरूरी भएको बताए ।

देश र जनताको इमानदारीपूर्वक सेवा गर्ने लक्ष्य लिएकाहरूलाई पुँजीवादी बन्दोबस्तमा सहजरूपमा काम गर्न नदिने भएकोले नै सङ्घर्षको सहारा लिनुपर्ने धारणा उनले व्यक्त गरे । "पुँजीवादी

बाँकी पेज ७ मा

## पूर्व राजालाई चुरीफुरी गरे नागार्जुनबाट लखेट्ने पूर्व सभामुखको चेतावनी




भक्तपुर । नेकपा (माओवादी केन्द्र)का उपाध्यक्ष तथा प्रतिनिधि सभाका पूर्व सभामुख अग्निप्रसाद सापकोटाले पूर्व राजा ज्ञानेन्द्र शाहलाई पार्टी खोलेर राजनीतिको मैदानमा उत्रन सुझाव दिएका छन् । संविधान बिपरित चलखेल गरे सह्य नहुने उनको चेतावनी छ । सोमबार मध्यपुर थिमिको थिमि बैक्वेटमा नेपाल बुद्धिजीवी संगठनको भक्तपुर जिल्ला समन्वय समितिको तेस्रो सम्मेलनलाई सम्बोधन गर्दै सापकोटाले पूर्व राजा गणतन्त्र विरुद्ध गतिविधि गर्न थाले नागार्जुन दरवारबाट पनि लखेटिने चेतावनी दिएका हुन ।

बाँकी पेज ७ मा

## भाषा संरक्षणमा सरकारसँगै नेवार समुदाय सक्रिय हुनुपर्ने




काठमाडौं । नेपाल भाषाको संरक्षण र प्रवर्द्धनमा सरकारहरुलाई झक्झ्याउँदै नेवार समुदायहरु सक्रिय हुनुपर्नेमा नेपाल भाषा प्रवर्द्धन कार्यक्रमका सहभागीहरुले जोड दिएका छन् । बागमती प्रदेश सरकारले तामाङसँगै नेपाल भाषालाई सरकारी कामकाजको भाषाको रुपमा कार्यान्वयन गरिरहेकोले नेवार समुदाय जागरुक हुन आग्रह गरिएको हो ।

बागमती प्रदेशको संस्कृति तथा पर्यटन मन्त्रालय अन्तरगतको पर्यटन कार्यालय काठमाडौं र नेपाल भाषा एकेडेमीको संयुक्त आयोजनामा हेटौंडामा शनिबार कार्यक्रम भएको थियो । कार्यक्रममा नेपाल भाषा एकेडेमीले नेपाल भाषालाई बागमती प्रदेश सरकारले कामकाजको भाषा घोषणा गरेको सन्दर्भमा भाषिक जागरण अभिमुखीकरणका लागि आधारपत्र प्रस्तुत गरेको थियो ।

कार्यक्रम हेटौंडा उपमहानगरपालिका २ का वडा अध्यक्ष विष्णुगोपाल महर्जनको प्रमुख आतिथ्य तथा भाषा

बाँकी पेज ७ मा

## मध्यपुर थिमि नगरपालिका देशकै उत्कृष्ट नगरपालिका पुरस्कारबाट सम्मानित



भक्तपुर । मध्यपुर थिमि नगरपालिका आर्थिक बर्ष २०८०/८१ मा वातावरण, संस्कृति र पर्यटन क्षेत्रमा मुलुककै उत्कृष्ट नगरपालिका पुरस्कार २०८१ बाट सम्मानित हुन सफल भएको छ । नेपाल नगरपालिका संघको ३२ औं स्थापना दिवसको उपलक्ष्यमा प्रधानमन्त्री के पि शर्मा ओलीले मध्यपुर थिमि नगरपालिकाले वातावरण, संस्कृति र पर्यटन क्षेत्रमा उल्लेख्य कार्य सम्पादन गरेको र सो को उच्च मूल्यांकन गर्दै नेपाल नगरपालिका संघले मुलुककै उत्कृष्ट नगरपालिका पुरस्कार २०८१ द्वारा सम्मान गरेको हो ।

मध्यपुर थिमि नगरपालिकाले संस्कृति, सम्पदा संरक्षण गर्दै

बाँकी पेज ७ मा

## नेपालको सम्पदा सूचीकरणको हल्लीखल्ली

● गणेश राई

नेपाल सरकार संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयले अभौतिक सांस्कृतिक सम्पदा सूचीकरण गर्न गत माघ पहिलो साता सूचना आह्वान गरेको छ । सूचनामा अभौतिक सांस्कृतिक सम्पदा (सूचीकरण तथा व्यवस्थापन) कार्यविधि, २०८१ को दफा १९ बमोजिम अभौतिक सांस्कृतिक सम्पदा सूचीकरण गर्न चाहने व्यक्ति समुदायले २०८२ वैशाख मसान्तभित्र आवेदन पेश गर्न भनिएको छ ।

कार्यविधिको प्रस्तावनामा 'नेपाल एउटा बहुजातीय, बहुभाषिक, बहुसांस्कृतिक, बहुधार्मिक मुलुक भएकाले यहाँ रहेका हरेक जातजाति, भाषाभाषी, संस्कृति एवं धर्मसँग सम्बन्धित विभिन्न अभौतिक सांस्कृतिक सम्पदाहरूलाई संरक्षण, संचालन, निरन्तरता एवं व्यवस्थापनका लागि सम्पदा सूचीकरण गर्ने प्रक्रियालाई सहज एवं विधिसम्मत बनाउन जातीय समुदायलाई परम्परागत रूपमा निरन्तर अभ्यास गर्दै आएका तथा प्रचलनमा रहेका एक पुस्तापछि अर्को पुस्तान्तरण गर्दै हुँदै सम्बन्धित जातीय समुदाय एवं समग्र राष्ट्रको पहिचानका रूपमा रहेका अभौतिक सांस्कृतिक सम्पदाहरूलाई संरक्षण र व्यवस्थापन गर्न' कार्यविधि निर्माण गरिएको उल्लेख छ । 'अभौतिक सांस्कृतिक सम्पदा' भन्नाले नेपालमा परम्परागत रूपमा बसोबास गर्दै आएका जातीय समुदायका एक पुस्ताबाट अर्को पुस्तामा हुँदै तथा अभ्यास भई आएका देहायबमोजिमका सांस्कृतिक विधाहरूसमेतलाई सम्झिनु पर्छ भनिएको छ ।

(१) अभौतिक सांस्कृतिक सम्पदाको संवाहकको रूपमा भाषासहितका मौखिक परम्परा तथा अभिव्यक्ति । (२) अभिनय तथा मञ्चन कला । (३) सामाजिक व्यवहार, अनुष्ठान तथा चाडपर्वका उत्सव । (४) प्रकृति र ब्रह्माणसँग सम्बन्धित ज्ञान तथा व्यवहार । (५) परम्परागत कला कौशलता, उत्पादन गर्ने सीप र प्रविधि । (६) परम्परागत खाद्य परिकार । (७) परम्परागत खेलकुद । (८) पहिरन लगायत आभूषण सम्बन्धी ज्ञान । (९) सम्पदा अभ्यास, कार्यान्वयन तथा अभ्यास गर्ने स्थल । (१०) स्मरणमा रहेका तर अभ्यासमा नरहेका अमूर्त सांस्कृतिक सम्पदा ।

राष्ट्रिय जनगणना २०७८ को तथ्यांकअनुसार देश नेपालमा १४२ जातजाति छन् । उनीहरूले बोल्दैआएका १२४ भाषा छन् । यसैगरी हिन्दु, बौद्ध, इस्लाम, किरात, क्रिस्चियन, प्रकृति, बोन, जैन, बहाई र सिख गरी १० वटा धर्म मान्ने

बाँकी पेज ६ मा

# बागमति प्रदेशमा नेपालभाषा र तामाङ भाषालाई कार्यन्वयनमा ल्याइने

ललितपुर । उच्च माध्यमिक तह, स्नातक तह, स्नातकोत्तर तह उत्तीर्ण गरेका करीब सय जना बिद्यार्थीहरु ताम्रकार समाजको २० सौं बार्षिक साधारणसभामा सम्मानित हुनगइरहेका थिए । त्यस्तै करीब बीस जना ज्याःजंक्वः (पास्नी) सकेका जेष्ठ नागरिकहरु पनि सोही अवसरमा सम्मानित हुनगइरहेका थिए । त्यस्तै पाटनमा जन्मेर हाल काभ्रेको पनौतीमा बसोबास गर्दै आइरहनु भएका साहित्यकार, लेखक, गीतकार ध्रबकृष्ण ताम्रकार उग्रचण्डी प्रतिभा सम्मानबाट नगद पुरस्कार सहित सम्मानित भएका थिए ।

ताम्रकार समाजको २६ औं सामुहिक भेला तथा २० औं बार्षिक साधारणसभाका प्रमुखअतिथि बागमति प्रदेशका श्रम, रोजगार तथा यातायात मन्त्री प्रेमभक्त महर्जन थिए । उनले सामाजिक क्षेत्रमा ताम्रकार समाजबाट गरिदैं आइरहेको कार्यहरुको उच्च प्रशंसा गर्दै बागमति प्रदेशमा पारित भइसकेको नेपालभाषा र तामाङ्ग भाषालाई सरकारी कामकाजको भाषा बनाउनेलाई कार्यन्वयन तहमा लैजाने प्रतिबद्धता ब्यक्त गरे ।

बिशिष्ट अतिथि ललितपुर महानगरपालिकाका उपमेयर मञ्जरी शाक्य बज्राचार्यले नगरका अन्य समाजहरु तथा संघसंस्थाहरुका लागी ताम्रकार समाज प्रेरणाको श्रोत बनेको उल्लेख गर्दै महानगरपालिका सदैब महानगरबासीहरुको हकहितको लागी लागिपरेको बताए । सभाका सभापति ताम्रकार समाजका अध्यक्ष बिनोद ताम्रकारले ताम्रकार समाज विगत लामो समय देखि बिभिन्न सामाजिक कार्यहरुमा संलग्न रहदै आइहरेको तथा नगरको संस्कृति, सम्पदा, भाषा आदिको संरक्षण सम्वर्द्धनका लागि नगरका अन्य संघसंस्थाहरु संग सहकार्य गर्दै आइरहेको बताउनु भयो ।

उक्त कार्यक्रममा समाजका दाताहरुलाई कदरपत्र तथा आजिवन सदस्यहरुलाई प्रमाणपत्र पनि वितरण गरिएको थियो । सो कार्यक्रममा समाजका निबर्तमान अध्यक्ष रबिन्द्रराज ताम्रकार, बागमति प्रदेशका प्रदेश सदस्य रामकृष्ण चित्रकार, ललितपुरका प्रहरी प्रमुख एसएसपी श्यामकृष्ण अधिकारी, अनुसन्धान निर्देशक रमेशचन्द्र यादब, समाजका पूर्व अध्यक्षहरु, सल्लाहकारहरु, बिभिन्न जातिय समाजका अध्यक्षहरु, संघ संस्थाका अध्यक्षहरु, समाजका सदस्यहरु तथा बिद्यार्थीहरुको सहभागिता रहेको थियो । साधारणसभाको बन्दसत्रमा समाजका महासचिब दिपेश ताम्रकारले बार्षिक कार्यप्रतिबेदन, कोषाध्यक्ष बिमल ताम्रकारले आयब्यय बिवरण प्रस्तुत गर्नु भएको थियो । समाजका उपाध्यक्ष शम्भुगोबिन्द ताम्रकारले उपस्थित सबैलाइ धन्यबाद ज्ञापन गर्नु भएको थियो ।



# हाटबजारमा हरिया तरकारी बिक्री गर्दै कलिला विद्यार्थी

भक्तपुर । रोम्बस नेशनल स्कूलको आयोजनामा हाटबजार संचालन गरिएको छ । सो हाटबजारमा कक्षा १ देखि ५ सम्मका विद्यार्थीहरूले भाग लिएका थिए । उनीहरुले विभिन्न सामग्रीहरु बिक्री लागि राखेका थिए । हाटबजारमा हरियो सागपात, ताजा तरकारी, जुस, कफी, पानीपुरी र अन्य परिकारहरू राखिएका थिए ।

विद्यार्थीहरू आफैंले ग्राहक बोलाउँदै, मूल्य निर्धारण गर्दै र सामान बिक्री गर्दै व्यावसायिक सोचको अभ्यास गरिरहेका थिए । विशेषगरी पानीपुरी सबैभन्दा लोकप्रिय रह्यो, जहाँ विद्यार्थीहरूको उत्साह, हाँसो र रमाइलो माहोलले हाटबजारलाई अझ आकर्षक बनाएको थियो । जुस र कफी स्टलमा पनि शिक्षक तथा अभिभावकहरूको विशेष चासो देखियो ।

कार्यक्रमको उदघाटन विद्यालयका उपप्रधानाध्यापक अमृता ढकालले गरेको थियो । उनले विद्यार्थीहरूलाई व्यवसायिक सीप, आत्मनिर्भरता र परिश्रमको महत्व बुझाउन यस प्रकारको कार्यक्रम आयोजना गरिएको बताए । उनले भने, “सानै उमेरदेखि सिकाइएका यस्ता सीपले भविष्यमा ठूला अवसरहरू सिर्जना गर्न सक्छन् ।“

शिक्षक, अभिभावक र विद्यार्थीहरूको सक्रिय उपस्थिति रहेको हाटबजारलाई झनै प्रभावकारी बनायो । विद्यार्थीहरूले सहकार्य, जिम्मेवारी र व्यवहारिक व्यापारिक सीप सिक्ने अवसर पाए ।

विद्यालयले आगामी दिनमा पनि विद्यार्थीहरूलाई व्यवहारिक शिक्षा प्रदान गर्न यस्ता कार्यक्रमहरूलाई निरन्तरता दिने योजना बनाएको जानकारी दिएको छ ।

# नगदेश सिद्धिगणश मन्दिरका गुथियारलाई पोशाक वितरण

मध्यपुर थिमि । मध्यपुर थिमिको नगदेशस्थित सिद्धि गणेश मन्दिरका द्योपाला (गुथियार)हरुलाई शनिबार एक कार्यक्रम गरी पोशाक वितरण गरिएको छ । सिद्धि गणेश द्योछें विकास समितिले द्योपालाहरुलाई पोशाक वितरण गरिएको हो ।

बिस्का जात्राको क्रममा द्योपालाहरु सवैजना एउटै पोशाकमा होस् भन्ने मनसायले वितरण गरिएको समितिका सचिव विजयशंकर प्रधानांगले जानकारी दिए । उनका अनुसार बिस्का जात्राको क्रममा प्रत्येक वर्षको अन्तिम दिन (चैत्र मसान्त), वैशाख १ गते र वैशाख २ गते यहाँ सिद्धि गणेशको एकल खटजात्रा हुन्छ । वैशाख १ गते बहीसिया जात्रा (बेलुकाको जात्रा) र २ गते सुथःसिया जात्रा (विहान) को जात्रा हुने गर्दछ ।

# विनायकलाई अन्तर्राष्ट्रिय स्वर्ण अवार्ड

मध्यपुर थिमि । शिक्षा ,सभ्यता र संस्कृतिको त्रिवेणी बन्दै विद्यार्थीहरूलाई जीवनोपयोगी एवं व्यावहारिक शिक्षा प्रदान गर्दै आएको विनायक शिक्षा निकेतन इङ्लिस स्कुलले थप अर्को अन्तर्राष्ट्रिय उत्कृष्ट स्वर्ण पदक/अवार्ड प्राप्त गर्न सफल भएको छ ।

स्कुल इन्टरप्राइजेज च्यालेन्ज (क्भ्ऋत्ऋब) कार्यक्रम अन्तर्गत विश्वका विभिन्न देशका हजारौं स्कुलका विद्यार्थीहरु बीच उद्यमशीलता विकास कार्यक्रम अन्तर्गत विश्वप्रतिष्ठित संस्था त्भबअज ब :बल त्य ँ ष्कज ले विनायकका न्ययम ाययम, न्ययम :ययम विद्यार्थीहरूको समूहले गरेको व्यावसायिक योजना, विविध कार्यक्रम र आत्मनिर्भर बन्न सक्ने ज्ञानको मूल्याङ्कन गरी सो अन्तर्राष्ट्रिय स्तरको स्वर्ण पदक प्रदान गरेको थियो ।

विशेष गरेर उक्त कार्यक्रम अन्तर्गत सानैबाट विद्यार्थीहरुलाई सिपमूलक कुराहरूको शोध गर्न लगाई उनीहरूलाई विद्यालय जीवनबाट नै कसरी आत्मनिर्भर बन्ने, शिक्षा सँगसँगै व्यवहारिक ज्ञान कसरी सिकाउँदै लान सकिने भन्ने शिक्षा प्रदान गर्न विगत पाँच वर्षदेखि यस्ता प्रतियोगिताहरूमा भाग लिई कास्य र रजत पदक जितिसकेको र विद्यार्थी तथा शिक्षक शिक्षिकाहरूको कडा मेहनत तथा परिश्रमका कारण यसपटक स्वर्ण पदक प्राप्त गर्न सफल भएको जानकारी विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रबिक्रम प्रजापतिले दिए ।

# संसारका १० अनौठा संग्रहालयहरू




एजेन्सी । संसारभरि यस्ता धेरै ठाउँहरू छन् । जसको बारेमा हामीले अहिले सम्म कल्पना पनि गरेका छैनो होला । यस्तै विश्वमा यस्ता संग्राहलय छन् । जसमा अनौठा पुरातात्विक बस्तुहरुको संग्रह गरिएको छ । यदि तपाईंलाई पनि यस्ता संग्रहालयहरू भ्रमण गर्ने मन छ भने, संसारका सबैभन्दा अचम्मका संग्रहालयहरूको बारेमा जान्नै पर्छ । आउनुहोस्, संसारका केही संग्रहालयहरूमा अनौठा चीजहरूको संग्रह छ ।

संसारका धेरै संग्रहालयहरू आफ्ना अनौठा विषयवस्तु र प्रदर्शनीहरूका लागि प्रसिद्ध छन् । यी संग्रहालयहरूले सामान्य कला वा इतिहास बाहेक केही अनौठा र रोचक कुराहरू प्रस्तुत गर्छन् । मानिसहरू तिनीहरूलाई देखेर छक्क पर्छन्। कोही यी संग्रहालयहरूको प्रशंसा गर्छन् भने कोही तिनीहरूको अस्तित्वको विचारमा नै हाँस्छन्। संसारको सबैभन्दा असामान्य संग्रहालयहरू मध्ये एक भारतमा अवस्थित छ ।

संसारका १० अनौठा संग्रहालयहरू: संसारका १० अनौठा संग्रहालयहरू

कला, संस्कृति, इतिहास र विज्ञान जस्ता क्षेत्रहरूमा रुचि राख्ने व्यक्तिहरू विश्वभरका संग्रहालयहरूमा जान्छन् । यदि तपाईंलाई पनि संग्रहालयहरू भ्रमण गर्ने मन छ भने, संसारका १० सबैभन्दा अचम्मका संग्रहालयहरूको बारेमा जान्नुहोस् ।

१. खराब कला संग्रहालय (:इद्यब), अमेरिका

स्थान : बोस्टन, म्यासाचुसेट्स, संयुक्त राज्य अमेरिका

विशेषता: यो संग्रहालय 'बेकार कला' मा समर्पित छ । यहाँ चित्र र मूर्तिकलाहरू प्रदर्शित गरिएका छन् जुन धेरै नराम्रा वा हास्यास्पद खालका छन् । यसको आदर्श वाक्य हो - 'कला जुन यति खराब छ कि यसलाई बेवास्ता गर्न सकिँदैन' ।

उदाहरण: कुकुरहरूको अनौठो चित्रहरू वा भाँचिएका मूर्तिहरू ।

खराब कला संग्रहालय: यो १९९४ मा स्थापना भएको थियो ।

२. टर्कीको एभानोसको कपाल संग्रहालय

स्थान: एभानोस, टर्की

विशेषता : यहाँ विश्वभरका महिलाहरूको कपालको संग्रह छ। यो संग्रहालय एक जना माटोका कलाकारले सुरु गरेका थिए जसले मानिसहरूसँग उनीहरूको कपाल मागेका थिए । अहिले भित्ता र छतमा १६,००० भन्दा बढी कपालका नमूनाहरू झुण्डिएका छन् ।

रोचक तथ्य : प्रत्येक नमुनामा दाताको नाम र ठेगाना लेखिएको हुन्छ ।

३. टुटेको सम्बन्धको संग्रहालय, क्रोएसिया

स्थान : जाग्रेब, क्रोएसिया

विशेषता : यो संग्रहालय टुटेका सम्बन्धहरूको सम्झनामा समर्पित छ । यहाँ मानिसहरूले आफ्ना पुराना सम्बन्धहरूसँग सम्बन्धित चीजहरू (जस्तै प्रेमपत्र, लुगा, टेडी बियर) दान गर्छन् र आफ्नो कथा पनि लेख्छन् । उदाहरण: रिसाएर फुटेको फोन ।

४. सुलभ अन्तर्राष्ट्रिय शौचालय संग्रहालय

स्थान: नयाँ दिल्ली, भारत

विशेषता : यो संसारको एक मात्र संग्रहालय हो जसले शौचालयको इतिहास देखाउँछ । यहाँ प्राचीन शौचालयदेखि आधुनिक डिजाइनसम्मका शौचालयका सामग्रीहरु प्रदर्शनीमा राखिएका छन् ।

रोचक तथ्य: यहाँ १७ औं शताब्दीको सुनको शौचालयको प्रतिकृति देख्न सकिन्छ ।

सुलभ अन्तर्राष्ट्रिय शौचालय संग्रहालय: यो १९९२ मा स्थापित भएको थियो ।

५. आइसल्याण्डिक फालोलोजिकल संग्रहालय, आइसल्याण्ड

स्थान: रेक्जाभिक, आइसल्याण्ड

विशेषता : यो संग्रहालयले जनावर र मानिसको लिंगसँग सम्बन्धित अंगहरूको संग्रह प्रदर्शन गर्दछ । यहाँ २८० भन्दा बढी प्रजातिका नमूनाहरू छन् ।

उदाहरण : ह्वेलको विशाल लिंगदेखि मुसाको सानो अंगसम्म ।

६. मृत्यु संग्रहालय, अमेरिका

स्थान : हलिउड, क्यालिफोर्निया, संयुक्त राज्य अमेरिका

विशेषता : यो संग्रहालय मृत्युसँग सम्बन्धित कुराहरूमा समर्पित छ । सिरियल किलरका हतियार, शव परीक्षणका तस्बिरहरू र मृत्युसँग सम्बन्धित अनौठा वस्तुहरू यहाँ प्रदर्शित छन् ।

रोचक तथ्यहरू : यहाँ चार्ल्स म्यानसन जस्ता कुख्यात अपराधीहरूसँग सम्बन्धित कुराहरू पनि छन् ।

७. करिवुर्स्ट संग्रहालय, जर्मनी

स्थान : बर्लिन, जर्मनी

विशेषता : यो संग्रहालय जर्मनीको प्रसिद्ध स्ट्रीट फूड 'करी वुर्स्ट' (ससेजसहितको करी सस) लाई समर्पित थियो । यहाँ यो परिकारको इतिहास, तयारी गर्ने तरिका र नक्कली ससेजको गन्ध पनि अनुभव गर्न सकिन्छ । यो २०१८ मा बन्द भएको थियो ।

रमाइलो तथ्य: त्यहाँ करीवर्स्ट आकारको सोफा पनि थियो ।

८. ममीहरूको संग्रहालय, मेक्सिको

स्थान : गुआनाजुआटो, मेक्सिको

विशेषता : यहाँ १०० भन्दा बढी ममीहरू प्रदर्शन गरिएका छन्, जुन १९ औं शताब्दीमा हैजा महामारीको समयमा मरेका मानिसहरूका हुन् । यी प्राकृतिक रूपमा संरक्षित छन् । यो संग्रहालय २५०० वर्षभन्दा पुरानो हो ।

रोचक तथ्य: यहाँ गर्भवती महिलाको ममी र संसारको सबैभन्दा सानो ममी पनि छ ।

९. पानीमुनिको कला संग्रहालय (म्युजियो सुबाकुआटिको डे आर्टे - मुसा), मेक्सिको

स्थान: क्यानकुन, मेक्सिको

विशेषता: यो संसारको पहिलो पानीमुनि संग्रहालय हो । यहाँ समुद्रको भुइँमा ५०० भन्दा बढी मूर्तिहरू राखिएका छन्, कुनलाई स्कुबा डाइभिङ गर्नुपर्छ भनेर हेर्नको लागि ।

उद्देश्य: समुद्री जीवनको प्रवर्द्धन र कोरल चट्टानहरूको संरक्षण गर्नु ।

क्यानकुन अन्डरवाटर संग्रहालय : यो २०१० मा स्थापना भएको थियो ।

१०. परजीवी संग्रहालय (मेगुरो परजीवी विज्ञान संग्रहालय), जापान

स्थान: टोकियो, जापान

विशेषता : यो संग्रहालय परजीवीहरूलाई समर्पित छ। यहाँ ८ मिटर लामो टेपवार्म सहित ३०० भन्दा बढी परजीवीका नमूनाहरू छन् ।

# तरुणदलका पूर्व अध्यक्ष तथा नेताहरुको भेला भक्तपुरमा



भक्तपुर । तरुणदलका पूर्व अध्यक्ष तथा नेताहरुको भेला गत शनिबार भक्तपुरमा सम्पन्न भएको छ । बिगतमा तरुण दलको नेतृत्व तहमा पुगिसकेका नेता तथा केन्द्रिय पदाधिकारी र जिल्ला सदस्यहरुको भेला भक्तपुरमा सम्पन्न भएको हो ।

वर्तमान राजनीतिक गतिबिधिहरु र यसले श्रृजना गरेको राजनीतिक वातावरणका बिषयमा केन्द्रित रहेर उक्त कार्यक्रममा छलफल गरिएको तरुण दलका पूर्व अध्यक्ष बिनोद प्रसाद कायस्थले जानकारी दिए ।

नेपाली काँग्रेसलाई मजबुद बनाउन लागेका बिगतका पदाधिकारीहरु हाल केही जिम्मवार पदमा रहेर राजनीतिमा सक्रिय रहिरेहेका र हाल क्रियाशील रहेका साथीहरुमा अबको राजनीतिक दिशा कस्तो हुनु पर्छ भन्ने बिषयमा ब्यापक रुपमा छलफल गरिएको कायस्थले बताए । संबिधानसभाबाट प्राप्त उपलब्धि बिरुद्ध सडकमा बिगत केही समय यतादेखि अराजक प्रदर्शन भईरहेकाले सो उपलब्धिको रक्षार्थ पनि सरकार र पाटीलाई सकारात्मक दबाब श्रृजना गर्न यो भेला उपलब्धिक मूलक हुने उनले बताए । भेलामा छलफल भएका बिषयहरुलाई संग्रह गरि पार्टी केन्द्रिय कार्यालयका पदाधिकारीहरुलाई बुझाउने र यसले पार्टीका आगामी दिनको कार्यदिशा निमार्ण गर्न पनि थप सहयोग पुग्ने अपेक्षा रहेको कायस्थले बताए ।

भेलामा देशका बिभिन्न जिल्लाबाट १०० औंको सङ्ख्यामा प्रतिनिधिहरुको सहभागिता रहेको थियो ।

# चीनको उच्च स्तरको योजनाले ६ वर्षको बच्चा पनि एआईमा मास्टर बन्ने !

एजेन्सी । अमेरिका, चीनलगायत युरोपेली मुलुकमा एआईको साम्राज्य जतातते बढ्दै छ । धेरैजसो देशहरूमा, स्कूल स्तरमा एआई पढाइन्छ । कक्षा १ का बच्चाले ए, बि, सी, डि. क, ख, ग, घ, ए.., कविता र कथाहरू पढ्छन् भने चीनमा बालबालिकाहरूलाई केवल ६ वर्षको उमेरदेखि नै कृत्रिम बुद्धिमत्ता सिकाउन थालिएको छ । चीनको राजधानी बेइजिङ लगायत धेरै क्षेत्रहरूमा एआईलाई अनिवार्य शिक्षाको हिस्सा बनाइएको छ ।

चीन एआई क्षेत्रमा नेतृत्व हासिल गर्न चाहन्छ । त्यसैले सानै उमेरदेखि बालबालिकालाई एआई अर्थात् कृत्रिम बुद्धिमत्ताको अवधारणा सिकाउने कुरामा ध्यान केन्द्रित गरिएको छ (कृत्रिम बुद्धिमत्ता शिक्षा) । यसले बालबालिकाको यस विषयमा रुचि बढ्नेछ र उनीहरूले यसमा थप काम गर्ने इच्छा व्यक्त गर्नेछन् । चीनमा एआईको अध्ययन कुन कक्षाबाट सुरु हुन्छ र त्यहाँ आर्टिफिसियल इन्टेलिजेन्सको पाठ्यक्रम के हो जान्नुहोस् ।

चीनमा एआई शिक्षा: चीनमा एआई शिक्षा कुन कक्षाबाट सुरु हुन्छ ?

प्राथमिक तह (कक्षा १ बाट): बेइजिङ नगर शिक्षा आयोगले मार्च २०२५ मा एक घोषणा गर्‍यो । यस अनुसार, सेप्टेम्बर २०२५ देखि सुरु हुने शैक्षिक सत्रमा प्राथमिक र माध्यमिक विद्यालयहरूमा एआईको अध्ययन अनिवार्य हुनेछ। यसको अर्थ ६ वर्षको उमेरदेखि नै बालबालिकाहरू एआईसँग परिचित हुनेछन् ।

माध्यमिक र उच्च तह: माध्यमिक विद्यालय (कक्षा ७-९) र उच्च माध्यमिक विद्यालय (कक्षा १०-१२) मा एआईलाई अझ गहन रूपमा पढाइन्छ ।

चीनमा स्कूल पाठ्यक्रम: चीनका स्कूलहरूमा एआई पाठ्यक्रम के हो ?

चीनमा एआई पाठ्यक्रम उमेर र शिक्षा स्तरको आधारमा फरक तरिकाले तयार पारिएको छ। यो ल्क्ष्भ्च्त् जस्तो एकीकृत ढाँचाको सट्टा प्रविधि र नवीनतामा केन्द्रित छ । तपाईंले बेइजिङ र अन्य प्रान्तहरू (जस्तै झेजियाङ, ग्वाङ्झाउ) मा लागू गरिएको पाठ्यक्रमको आधारमा यसको विवरणहरू हेर्न सक्नुहुन्छ :

१. प्राथमिक विद्यालय (कक्षा १-६, उमेर ६-१२)

अवधि: प्रति वर्ष कम्तिमा ८ घण्टा ।

ध्यान: आधारभूत बुझाइ र व्यावहारिक अनुभव ।

पाठ्यक्रम:

एआईको परिचय: एआई के हो, यसले कसरी काम गर्छ (स्मार्ट खेलौना, आवाज सहायक जस्ता सरल उदाहरणहरू) ।

व्यावहारिक गतिविधिहरू: रोबोटिक्स, लेगो प्रोग्रामिङ र साधारण एआई उपकरणहरूको प्रयोग ।

डिजिटल उपकरणहरू: वाक् पहिचान र संश्लेषणको आधारभूत बुझाइ ।

एआई नैतिकता: एआईको जिम्मेवार प्रयोग (उदाहरणहरू: गोपनीयता, निष्पक्षता) ।

उद्देश्य: बालबालिकालाई प्रविधिसँग परिचित गराउनु र उनीहरूको जिज्ञासा बढाउनु ।

२. माध्यमिक विद्यालय (कक्षा ७-९, उमेर १३-१५)

अवधि: प्रति वर्ष ८-१० घण्टा वा सोभन्दा बढी ।

ध्यान केन्द्रित: एआई र आधारभूत अवधारणाहरूको दैनिक प्रयोग ।

पाठ्यक्रम:

एआई अनुप्रयोगहरू: स्कूल र दैनिक जीवनमा एआईको प्रयोग (जस्तै च्याटबटहरू, स्मार्ट उपकरणहरू) ।

डेटा र एल्गोरिदम: डेटाको महत्त्व र सरल एल्गोरिदमहरूको बुझाइ ।

प्रोग्रामिङ: आधारभूत कोडिङ (पाइथन वा ब्लक-आधारित प्रोग्रामिङ जस्तै स्क्र्याच) ।

परियोजनाहरू: साना एआई परियोजनाहरू जस्तै स्पीच-टु-टेक्स्ट मोडेलहरू निर्माण गर्ने ।

उद्देश्य: व्यावहारिक सीप र प्राविधिक आधार विकास गर्नु ।

३. उच्च माध्यमिक विद्यालय (कक्षा १०-१२, उमेर १६-१८)

अवधि: ३६ घण्टा (२ क्रेडिट कोर्सहरू, प्रति क्रेडिट १८ घण्टा) ।

फोकस: उन्नत अनुप्रयोगहरू र नवप्रवर्तनहरू ।

पाठ्यक्रम:

एआईको इतिहास र विकास: एआईको अहिलेसम्मको यात्रा र महत्त्वपूर्ण कोसेढुङ्गाहरू ।

एल्गोरिदम र डेटा संरचना: स्नायु सञ्जाल, मेसिन लर्निङको जग ।

प्रोग्रामिङ : पाइथनमा एआई मोडेलहरू निर्माण गर्ने (उदाहरण: साधारण च्याटबोट वा छवि पहिचान) ।

नैतिकता र समाज: एआई, डेटा गोपनीयता र नैतिकताको सामाजिक प्रभाव ।

परियोजनाहरू: स्वायत्त रोबोट वा डेटा विश्लेषण उपकरणहरू जस्ता जटिल एआई प्रणालीहरूको डिजाइन गर्ने ।

उद्देश्य: विद्यार्थीहरूलाई एआईमा करियरको लागि तयार पार्नु र नवीनताको क्षमता विकास गर्नु ।

चीनको एआई विश्वमा प्रतिध्वनित हुनेछ

शिक्षण विधि:

प्राथमिक तहमा 'प्रयोगात्मक' र खेलमा आधारित सिकाइमा जोड ।

माध्यमिक र उच्च माध्यमिक विद्यालयमा परियोजना-आधारित सिकाइ र कोडिङ ।

शिक्षकहरूको तालिम: क्त्भ्ः (विज्ञान, प्रविधि, इन्जिनियरिङ, गणित) पृष्ठभूमि भएका शिक्षकहरूलाई ब्क्ष पढाउन तालिम दिइँदैछ ।

पाइलट परियोजनाहरू: २०२४ मा, १८४ विद्यालयहरूलाई एआई शिक्षाको आधार बनाइएको थियो, जुन अहिले देशभर मोडेल छन् ।

उपकरणहरू: स्क्विरल एआई जस्ता प्लेटफर्महरू र रोबोटिक्स किटहरूको प्रयोग ।

नैतिकतामा जोड: बालबालिकाहरूलाई सुरुदेखि नै एआईको जिम्मेवार प्रयोग सिकाइन्छ ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### नेताहरुको जनतामा भ्रमको खेती गर्दै लोकप्रिय बन्ने प्रवृति

गत सोमबार नेकपा एमाले र नेपाली कांग्रेसको दुई तिहाइ बहुमत प्राप्त सरकारले उर्जा मन्त्री दीपक खड्काको सिफारिसमा नेपाल विद्युत प्राधिकरणका कार्यकारी निर्देशक कुलमान घिसिङलाई अचानक अयोग्य भएको ठहर गर्दै पदबाट बर्खास्त गरेको छ । जबकि उनको कार्यकाल केही महिना मात्र बाँकी रहेको थियो ।

सरकारको यस निर्णयले आम जनसमुदायले कडा रुपमा सामाजिक संजाल मार्फत असहमति जनाएको छ । किनकी नेपाली जनमानसमा कुलमान घिसिङ उज्यालो नायकको रुपमा छबि बनाउन सफल कुशल व्यवस्थापकको रुपमा चिनिएका थिए । यसरी एकाएक उनलाई पदबाट बर्खास्त गरेपछि प्रमुख प्रतिपक्ष, प्रतिपक्ष र आम जनसमुदायसमेत सरकारको निर्णयको विरुद्धमा रहेको देखियो । यसबाट नेपाली जनमानसमा सरकार राम्रो काम गर्नेहरुलाई जसरी पनि अयोग्य बताउँदै पदबाट हटाउने र पहिलेबाटै आमजनमानसमा खराब भनेर चिनिएका र अलोकप्रिय छबि बनाएकालाई पुरस्कृत गर्ने राजनीतिक दलका नेताहरुमा देखिएको प्रवृतिले सरकार बिचौलियाहरुको चंगुलमा फस्दै गएको आकंलन गर्न थालिएको छ ।

सरकारको यस निर्णयबाट प्रतिपक्षमा रहेकाहरुले विरोध गर्नु त सामान्य नै हो । तर सत्ता घटक कै रुपमा रहेको नेपाली कांग्रेसका केही नेताहरुले पनि घिसिङलाई सरकारले हटाएकोमा विरोध गरेको छ । यसमा अग्रपंक्तीमा नेकाका महामन्त्रीद्वय गगन थापा र विश्वप्रकाश शर्मा रहेको छ । जसले खुलेरै सरकारको निर्णयको विरोध गर्नुको साथै नेपाली कांग्रेस पार्टीको पार्टीगत रुपमा असहमति रहेको सावैजनिक रुपमा घोषणा गरेको छ । त्यस्तै पार्टीका अर्का नेता शेखर कोइरालासमेत सरकारको निर्णय निरंकुशता तर्फ गएको टिप्पणी गरेको छ । तर पार्टी सभापति शेर बहादुर देउवालगायत संस्थापन पक्ष सरकारको निर्णय प्रति प्रतिबद्ध देखिएको छ । किनकी संस्थापन पक्षका देउवाको लागि त केपी ओली पछि सरकारको नेतृत्व गर्ने लाइनमा भएको कारण पनि बर्तमान सरकारको काम कारवाही प्रति पूर्ण समर्थन जनाउन बाध्य छ । त्यस्तै नेपाली कांग्रेसको लागि आज जनसमुदायमा सरकार प्रति देखिएको असन्तुष्टि र सरकारी काम कारवाही प्रतिको वितृष्णाबाट अलग राख्न पनि चुनौती रहेको अवस्थामा नेपाली कांग्रेसको छबि आम जनसमुदायमा स्वच्छ राख्न पनि कांग्रेसले महामन्त्री द्वय र नेता शेखर कोइरालालाई प्रयोग गरेको आशंका छ ।

किनकी नेपाली कांग्रेस संसदमा सबैभन्दा ठूलो पार्टी हुनुका साथै सरकारको हरेक निर्णयमा कांग्रेसको सहमती बिना नेकपा एमालेले केही गर्न सक्ने अवस्था छैन । त्यसैले पनि नेकपा एमालेका नेता तथा कार्यकर्ताहरु यस विषयमा मौन रहेको छ । तर सरकारको यस निर्णयमा यसमा सबै भन्दा बढी भूमिका नेपाली कांग्रेसको देखिएको छ । नेपाली कांग्रेसबाट सरकारको नेतृत्व गर्दै सत्तामा पुगेका देयवा पत्नी आरजु र नेका कै उर्जामन्त्रीको प्रस्तावमा कुलमान पदबाट बर्खास्त गरिएका हुन् । यसमा नेकपा एमालेका अध्यक्ष केपी शर्मा मात्र साक्षीका रुपमा देखिएका छन् ।

यसरी सरकारको अलोकप्रिय निर्णयमा नेपाली कांग्रेसको भूमिका प्रमुख रहदै आएको छ । बर्तमानमा नेकपा एमालेको नेतृत्वमा रहेको ओली सरकारलाई अलोकप्रिय बनाउने कार्यमा भूमिका रहेको नेकाले जनमानसमा राम्रो छबि बनाउनकै लागि आफ्ना युवा नेताहरुलाई सरकारको विपक्षमा रहेको भ्रम फैलाउने कार्य गरी रहेको राजनीतिक बिश्लेषकहरुको भनाई रहेको छ । यसरी नेका संसद र सडक आम समुदायमा भ्रम छर्दै दोहोरा चरित्र देखाइरहेको बुझाई छ । जसमा नेकपा एमालेको सिङ्गो पार्टी पंक्ति पनि दोषी छ । बर्तमानमा राजनीतिक दलको प्राथमिकता जसरी पनि सत्तामा पुग्ने र जनसमुदाय र राष्ट्रहितका लागि ठोस कार्यदिशा नहुँदा पनि देशमा बेथितिका बहाकहरुको बोलवाला बढ्दै गएको बर्तमान सन्दर्भमा नेताहरुको ध्यान जान जरुरी छ । साथै नेताहरुको जनतामा भ्रमको खेती गर्दै लोकप्रिय बन्ने प्रवृतिको अन्त्य अवश्य हुनेछ ।

# लिम्बुवानका मुन्धुमी सम्पदाको नालीबेली–१

● *अमित थेबे 'मिहाङ'*

लिम्बुवानका मुन्धुमी सम्पदाको नालीबेली

अमित थेबे 'मिहाङ'

इतिहास विगतमा भएका घटनाहरूको अध्ययन गर्ने विधा हो । व्यतीत भइसकेका घटनाबारे जान्न मानिसले विगतका स्रोतहरू हेर्ने गर्छन् । इतिहासले विगतको घटनाको स्मृतिहरू, आविष्कार, संकलन, संगठन, प्रस्तुति र व्याख्यालाई एकै ठाउँमा ल्याउने काम गर्छ ।

ऐतिहासिक स्रोतहरूमा लिखित सामग्री, मौखिक दस्तावेज वा परम्परागत मौखिक इतिहास, कला तथा साहित्य, पर्यावरणीय संकेतहरू पर्छन् । त्यसभित्र पर्ने सम्पदा हाम्रो विगतको विरासत मानिन्छ जसले हाम्रो राजनीति, समाज, कार्य र विश्वदृष्टिकोणमा महत्वपूर्ण भूमिका खेल्छ ।

विश्वका अन्य ठाउँमा जस्तै नेपालमा पनि ऐतिहासिक र साँस्कृतिक महत्वका सम्पदा र स्थलहरूको महत्वपूर्ण स्थान रहेको छ । यसले सदियौँदेखि चलिआएको परम्परा सँस्कृतिलाई मात्रै दर्शाउँदैन । ऐतिहासिक घटनाक्रमको साक्षीका रूपमा समेत काम गर्दछ ।

प्रस्तुत लेखमा मुन्धुमी सभ्यता मान्ने याक्थुङ समुदायको इलाका मानिने लिम्बुवानका मुन्धुमी महत्व र ऐतिहासिक स्थलहरूबारे चर्चा गरिनुका साथै यसको संरक्षणका लागि भएका प्रयासहरूबारे संक्षेपमा चर्चा गरिएको छ ।

मुन्धुम

तेह्रथुमको लालीगुराँस नगरपालिकामा अवस्थित चोत्लुङ पार्कमा रहेको मुन्धुमी थान, जहाँ मानिसको उमेर बढाउने र विवाहिता याक्थुङ महिलालाई कुमारी बनाउने अनुष्ठान गरिन्छ ।

याक्थुङ जातिको जीवन दर्शन र जीवन पद्धति दुवै हो मुन्धुम । केहीले यसलाई मोखिक धर्मशास्त्र पनि मानेका छन् । वरिष्ठ साहित्यकार एवम् याक्थुङ मुन्धुम तथा भाषाका विज्ञ वैरागी काइँलाले याक्थुङ जातिको सामाजिक, साँस्कृतिक वा नैतिक र धार्मिक धारणा, आस्था र आचरणको चरम परिणति नै अनेक मिथक, गाथा र लोककथाहरूमा अभिव्यक्त भई श्रुतिपरम्पराका रूपमा युगौँयुगदेखि जीवित छ र तिनैका समिष्टलाई मुन्धुम भन्नुपर्ने तर्क गरेका छन् ।

उनले मुन्धुम शब्दको व्युत्पत्ति याक्थुङ भाषामा 'मुन' - (चल) मुम्मा -चल्नु, हल्लिनु) क्रियाको धातु हो जसले गति वा स्थिर नरहेको गतिमयता भन्ने अर्थ लाग्छ । गतिमयता भनेको जीवन्तता हो । 'थुम' शब्दले कठिन वा शक्ति वा बलको अर्थ बोध गर्छ । गतिमय शब्द अलौकिक वा ईश्वरीय हुन्छ । चलायमान वा गतिमान रहने परम शक्ति वा शक्तिको वर्णन मुन्धुम हो । याक्थुङ लिम्बु जातिले आफ्ना पितृहरूलाई नै देउता मन्छन् । पितृहरूलाई बोलाउने भाषालाई उनीहरू माङपाःन(देउताको बोली) भन्ने गर्छन् । त्यहीं माङपाःन् भनेकै मुन्धुम हो ।

अध्येता डा. क्षितिज लिम्बुले जीवन दर्शनको मूल आधार मुन्धुम भएको जनाउँदै यो देउताको वाणी नभएर यो सभ्यतासँग सुरुवात भएको जनाए । यो चिन्तन प्रणाली भएको बताएका छन् । त्यस्तै, मुन्धुमका संकलक डीबी आङबुङले मुन्धुमलाई स्मृतिहरूको पुञ्ज र पूर्खाहरूको अनुभव सँगालो भएको धारणा राखेका छन् ।

याक्थुङ सँस्कृतिविद् आइत खजुमले ऐतिहासिक, साँस्कृतिक, भाषिक र आनुवांशिक हिसाबले मुन्धुम याक्थुङका लागि महत्वपूर्ण भएको जनाएका छन् । मुन्धुमका जानिफकार भनेका तुत्तु तुम्याङ, फेजिक्कुम फेदाङ्मा, सावारा येच्छाम साम्बा, सिभाक यामि (येबा/येमा) हरू हुन् । उनीहरूलाई एकमुष्ट रूपमा पेलिफाङ्साम भनिन्छ । याक्थुङ मुन्धुम सामाजिक इतिहास पनि हो । जहाँ पूर्खाहरूको बसाइँसराइँ र गतिशीलतालाई पनि दर्शाउँछ ।

याक्थुङ लिम्बु जातिको आदिम ज्ञान भनेको नै मुन्धुम हो । हिजो पूर्खाले बाँच्नका लागि प्रकृतिसँग सामना गरेका घटनाहरूलाई नै पुस्तौंपुस्ता दर सन्तानहरूमा मौखिक रूपमा हस्तान्तरण हुँदै आएका छन् । यस्ता घटना लिम्बुका देवारीहरू फेदाङ्मा, साम्बा, येबा र येमाहरूले आजसम्म फलाक्दै र गाउँदै आएका छन् । पूर्खाहरूको स्तुति र पुकार गरेमा प्राकृतिक विपत्तिबाट बच्न सकिन्छ भन्ने याक्थुङ लिम्बु जातिमा आजपर्यन्त विश्वास र मान्यता छ ।

याक्थुङ

नेपालको सुदूरपूर्वी क्षेत्रमा बसोबास गर्ने समुदाय हो याक्थुङ जाति । यो समुदाय नेपालको ५९ आदिवासी जनजातिको समूहमा पनि पर्छ । उनीहरू लिम्बु जातिका रूपमा अरूमाझ परिचित भएपनि उनीहरू आफैँले चाहिँ आफूलाई सुसुवा लिलिम याक्थुङहाङका सन्तान 'याक्थुङ्बा' भन्छन् । उनीहरूको ऐतिहासिक थातथलो र पुर्ख्यौली भूगोल लिम्बुवान हो । जुन अरुणपूर्व नदी टिष्टापश्चिम, तिब्बत दक्षिण र चारकोशे जंगलउत्तरका ताप्लेजुङ, संखुवासभा, धनकुटा, तेह्रथुम, पान्थर, इलाम, झापा, मोरङ र सुनसरी हो । केही ऐतिहासिक भूगोल भने भारतको सिक्किम र पश्चिम बंगालमा पर्छन् । राष्ट्रिय जनगणनाअनुसार याक्थुङ लिम्बुजातिको जनसंख्या ४,१४,७०४ रहेको छ । उनीहरू आफ्नो भाषालाई याक्थुङ पाःन् भन्छन् । २४७ वर्षअघि याक्थुङहरूका पूर्खा सिरिजङ्गा थेबेले निर्माण र विकसित गरेको लिपिलाई सिरिजङ्गा लिपि भन्छन् । याक्थुङ लिम्बुहरूको आफ्नै मौखिक सामाजिक इतिहास र मौखिक शास्त्र छ । जसलाई उनीहरू मुन्धुम भन्छन् ।

याक्थुङ लिम्बु जातिको उत्पत्तिबारे कैयन् विद्वानहरूका बेग्लाबैग्लै मतहरू छन् । इतिहासकार इमानसिङ चेम्जोङले लिम्बुहरूलाई काशी र ल्हासाबाट आएको भनेर तर्क अघि सारेका छन् । जुन गोत्रको अवधारणाबाट आएको हो । यद्यपि, याक्थुङ समुदायमा गोत्र हुँदैन । पछिल्लो समयमा प्रकाशित भएका अधिकांश वंशावलीहरूमा गोत्र(काशी, ल्हासा, ताइस्यान) उल्लेख भएका छैनन् । याक्थुङको गोत्र नभएर मिङ्स्रा हुन्छ । जुन माङ्गेना यक्सँग जोडिएको हुन्छ ।

इतिहासका अध्येता अर्जुनबाबु माबुहाङका अनुसार लिम्बुहरूको उत्पत्ति थलो/थामालुङ पत्ता लगाउन मिङस्रा(पहिलो पूर्खा), माङ्गेना यक(पूर्खाले ढालफाँड गरेको मूल कर्म थलो), फेच्चुवा यक(पूर्खाहरू छुट्टिएर बनेको थलो), नाहाङ्मा यक(पूर्खाहरूको शक्ति र प्रसिद्धिसँग जोडिएको ठाउँ), सामसामातेन(मृतकको सातो पुऱ्याइने ठाउँ जहाँ पितृ/थेबासामलाई सातो बुझाइन्छ), साम लामातेन(जुन ठाउँबाट फेदाङ्मा/देवारीहरूले गर्भवती महिलाको सातो जगाएर ल्याउँछन्) र चो?लुङ(पूर्ख्यौली शक्ति जगाउने ठाउँ) भनेर जान्नुपर्दछ । मुन्धुममा याक्थुङ लिम्बु जातिको उत्पत्ति स्थल ताप्लेजुङको फक्ताङलुङ आसपास इखाबु, लेलेप, तापेथोक, जस्ता ठाउँहरूमा बढी वर्णन गरिएको छ ।

मुन्धुम र इतिहासमा थिबोङ याक्थुङ

याक्थुङ मुन्धुमले तागेरानिङवाफुमाङ या युमामाङलाई सर्वोच्च चेतना या ईश्वरका रूपमा मान्ने गर्दछन् । याक्थुङ सभ्यता पनि उनकै उपज भएकोमा विश्वास राख्छन् । सामाजिकशास्त्र र मानवशास्त्रको हिसाबले अध्ययन गर्दा इम्बिरी याङ्थाङ्वा(तम्मर खोला)कै वरिपरि याक्थुङको उत्पत्तिका सामाजिक इतिहास, कथा, आख्यान र मिथकहरू पाइन्छन् । हिमाली भाषाका विद्वान डा. भ्यानड्रिमले समेत भोटबर्मेली परिवारमा फेदापको याक्थुङ भाषालाई अरूभन्दा प्राचीन भाषा मानेका छन् । र, फेदापबाटै पूर्वी हिमाली भाषाहरू फैलिएको अध्ययनले बताएका छन् । डा. भ्यानड्रिमले भनेको फेदाप चाहिँ तेह्रथुम नभएर समग्र लिम्बुवान वा महाफेदाप क्षेत्र हो । जुन इतिहासकार चेम्जाङले पनि आफ्नो पुस्तकमा उल्लेख गरेका छन् ।

याक्थुङ मुन्धुमअनुसार सर्वशक्तिमान, सर्वव्यापी तागेरानिङ्वाफ्ुमाङपछि पोरोक्मी यम्भामिमाङ आएर सृष्टि निर्माणपछिका अरू कार्यहरू सम्पन्न गरे । त्यसपछि, खाम्जिरी खाम्बोङमासा लुङजिरी लुङबोङमासाको सृष्टि भयो । उनीहरूलाई पहिलो तुम्याहाङ(भद्रभलादमी) पनि मानिन्छ ।

मुजिङ्ना खेयोङ्नालाई चाहिँ पहिलो मानव स्त्रीका रूपमा मुन्धुममा व्याख्या गरिएको छ । उनले सुरित्तेन कजेङ(हावा)सँगको संसर्गपछि सुसुवेन लालावेङ जन्मिए । पछि उनी सावायुक्फुङ केम्वाका नामले परिचित भए।उनले थोसोलुङ्मा फियामालुङ्माबाट सुच्छुरु सुहाम्फेवा नामको छोरा र योसोलुङ्मा मुक्कुमलुङ्माबाट तेत्लारा लाहादाङ्ना नामको छोरीलाई जन्म दिए ।

त्यस्तै, सुसारेहरू सुसालिङ्मा सुसाङ्लिङ् र तुङ्सा लिङ्मा नासोलुङ फातेलुङमाहरूबाट थोसु साङदाङ खेवा र योसु लिङदाङ खेवाहरू जन्मिए । पछि, सुहाम्फेवा र लाहादङ्नाको हाडनाताबाट १८ सन्तानहरू जन्मिए ।

इतिहासकार सन्ध्या सिङ्जाङ्गोले याक्थुङ सभ्यतालाई पाँच कालखण्डमा वर्गीकरण गरेका छन् । पहिलो, पूर्वप्राचीन काल, दोस्रो, प्राचीन काल, तेस्रो मध्यकाल, चौथो, आधुनिक र पाँचौ समसामयिक काल हुन् । पूर्वप्राचीनकालमा चइत् मुन्धुम, सा?मा कुमाङ पोक्मा मुन्धुम, तागेरानिङ्वाफुमाङ मुन्धुम पर्छन् । प्राचीनकालमा सृष्टि काल, मानव उत्पत्तिको युग, शिकारी युग, कृषि युग पर्छन् ।

मध्यकालमा तेत्लारा लाहादङ्ना सुम्हाम्फेवा मुन्धुम र सावा याहाङकाल पर्छन् । जहाँबाट याक्थुङ सभ्यताको सुरुवात भएको मानिन्छ । आधुनिककालमा सावा येत्हाङकाल सुरु भएको थियो । सावा याहाङबाटै आठ शक्तिशाली शाषकहरूका रूपमा चिनिएका सावा येत्हाङ आएका हुन् । इसाको छैटौं शताब्दीपूर्व महाफेदापको अवधारणा आएको हो । येत्हाङमा ताप्पेसो लुङमाहाङ, सगहिम्सो सङ्गिमहाङ, नियारा थक्चङहाङ, लालासो पाङबेन्हाङ, खेच्चुवत् उप्पनहाङ, साउन्दु उन्दुहाङ, साङ्गेन्हाङ पाङ्गेन्हाङ, सेन्छेरे सेनिहाङ पर्छन् ।

येत्हाङपछि थिवोङ याक्थुङ(दश लिम्बु)हरू देखा परेका छन् । ती दश लिम्बुहरूमा साप्लुप्लि साम्बाहाङ(तम्बरखोला थुम), सिसेयेन्सिरेङहाङ(मिवा/मैवालखोलाथुम), थक्थक्सो आङवोहाङ(आठराई थुम), थिन्दोलुङ खो?याहाङ(याङरुप थुम), इङासो पापोहाङ(पान्थर थुम), सेन्सेन्गुम फेदापहाङ(फेदाप थुम), इमेहाङ(चारखोल थुम), सोइयाक लादोहाङ(चौबिस थुम), ताप्पेसो पेरुहाङ(तेह्रथुम/थलायक) र ताक्लुङ खजुमहाङ(छथर थुम) हुन् । समसामयिक कालचाहिँ लिम्बुवान आन्दोलनको आधुनिक समय र 'कोशी' नामकरणविरुद्धसम्मको समय हो ।

हज्सन पाण्डुलिपिको खण्ड ७९, ८४ र ८६ मा याक्थुङ मुन्धुमबारे पर्याप्यत व्याख्या गरिएका पत्रहरू सङ्कलित गरिएका छन् । 'दशलिम्बु' लेखिएको सबैभन्दा पुरानो कागज वि.सं. १८२४ मा भेटिएको छ । जुत देवानलाई दिइएको लालमोहरमा 'तस लिम्बु' भनेर उल्लेख गरिएको छ । इतिहासकार माबुहाङले याक्थुङहरूले आफूलाई लुङबोङबा खाम्बोङबा भन्ने गरेको र सेनहरूले 'लुङबुङ' भन्न खोज्दा 'लिम्बु' भनेको हुन सक्ने तर्क गरेका छन् । याक्थुङ लिम्बुहरूको लोकोक्तिमा थिवोङ याक्थुङ/दश लिम्बु चलेको र कागजातहरूमा दश लुङबुङ/दश लिम्बु लेखेको पाइएको जनाएका छन् ।

लिम्बुवान

कुनैबेला अरुण नदीवारि याक्थुङहरूको शासन थियो । समग्रमा याक्थुङ लाजे भनिए पनि सिरेङ, फागो, याङरुप, मिक्लुक, फेदाप, सुदाप, प्रधापजस्ता सानासाना लुङबुङ(रजौटा)हरू भएको इतिहासकार अर्जुन माबुहाङले उल्लेख गरेका छन् । सेन शाषकहरूले पहिलो पटक याक्थुङ लुङबुङहरूको दश लिम्बु भनेर सम्बोधन गरेका थिए । सेनहरूले नै याक्थुङहरूमा सुभाङ्गी शासनको सुरुवात गरेका थिए ।

व्यापारिक हिसाबले उनीहरू भोटेसँग निकट थिए । शाहकालमा आइपुग्दा याक्थुङ याक्थुङ रजौटाहरू मैवाखोला, मिवाखोला, तमोरखोला, आठराई, याङरुप, पान्थर, छथर, चौबिसे जस्ता थुमहरूमा विभक्त भइसकेका थिए । पान्थर, छथर, चौबिसे, फेदाप, आठराईका लिम्बुहरू सेनसँग नजिक थिए । मैवाखोला, मिवाखोला, तमोरखोला, याङरुपका लिम्बुहरू सिक्किमका भोटे शाषक नामम्यालसँग नजिक थिए ।

**क्रमश**......

# शान्ति खल: द्वारा ससुपूजाको अवसरमा नयाँ वर्ष २०८२ को क्यालेन्डर विमोचन



भक्तपुर । मध्यपुर थिमिबाट काठमाडौंलगायत उपत्यकाका विभिन्न स्थानमा माइग्रेट भई गएका थिमिबासीहरुको साझा संस्था शान्ति खल:का सदस्य बीच आपसी सहयोग, सद्भाव तथा सांस्कृतिक पहिचान सहितको जीवन्तता जोगाइ राख्ने उद्देश्यका साथ २०३६ सालमा गठन भएको शान्ति खल : द्वारा आफ्नो बार्षिक कार्यक्रम अन्तर्गत सल्लाघारीको च्वङ्गा गणेशमा ससुपूजा सम्पन्न गरेको छ ।

सो समारोहमा खल:ले नयाँ वर्ष २०८२ को क्यालेन्डरसमेत विमोचन गरिएको छ । क्यालेढठर खल:का संस्थापक सदस्य रमेशकुमार चांगुभँदेल श्रेष्ठले विमोचन गरेको हो । खल:का संरक्षक सदस्य तथा शान्ति बहुउद्देश्यीय सहकारी संस्थाका अध्यक्ष बालगोपाल श्रेष्ठले सुखदु:खमा एकआपसमा आर्थिक एवं सामाजिक सहयोग गरी नेवा:हरुको मौलिक पहिचान जोगाउन खल:को स्थापना भएको बताउदै खल:ले आजको दिनसम्म आइ पुग्दा आफ्नो उद्देश्य पुरा गर्न सफल भएको र आगामी दिनमा अझ प्रगति गर्न सकोस भन्दै शुभकामना मन्तव्य व्यक्त गरेको थियो ।

कार्यक्रममा खल:का पूर्व महासचिव धर्मकृष्ण चपलिछेँ श्रेष्ठद्वारा लिखित "थिमिया स्यस्य: बिना" नामक पुस्तक ५० प्रति पनि नि:शुल्क वितरण गरिएको थियो । खल:का अध्यक्ष तथा कार्यक्रमका सभापति रत्नसुन्दर कायस्थले खल:मा मानार्थ, संरक्षक, संस्थापक तथा साधारण सदस्य रहेको जानकारी दिँदै आजीवन सदस्य तथा संरक्षक सदस्यको लागि दश वर्षे नीति र पछिल्ला नीति तथा योजनाबारे प्रष्ट पारेको थियो ।

उक्त कार्यक्रममा खल:का सदस्यहरुका साथै थिमिका प्रतिस्थित व्यक्तिहरुको सहभागी रहेको थियो । यो कार्यक्रम खल:ले वार्षिक रुपमा प्रत्येक वर्षको चैत्र महिनामा गर्दै आइरेको छ ।

# नेवा: पत्रकार राष्ट्रिय दबूबाट ६ जना पत्रकार पुरस्कृत




काठमाडौं । नेवा: पत्रकार राष्ट्रिय दबूले यस वर्ष ६ जना पत्रकारलाई विभिन्न पत्रकारिता पुरस्कार प्रदान गरेको छ । पत्रकार राष्ट्रिय दबूको शनिबार थिमि बैंक्वेटमा आयोजित १३ औं साधारण सभामा पुरस्कार प्रदान गरिएको हो ।

वाङमय शताब्दी पुरुष सत्यमोहन जोशी स्मृति पत्रकारिता पुरस्कार मेट्रोएफएमका वरिष्ठ सञ्चारकर्मी जुजुमान महर्जनलाई प्रदान गरिएको थियो । सो पुरस्कारको राशी १० हजार रुपैयाँ रहेको छ । त्यसैगरी नेपालका पहिलो त्रिपिटकाचार्य एवं २००१ मा तत्कालीन प्रधानमन्त्री जुद्ध शम्शेरले देश निकाला गरेका आठ भिक्षु मध्ये एक भिक्षु कुमारकाश्यप महास्थविरको नाउँमा भिक्षु कौण्डन्य महास्थविरले स्थापना गरेको भिक्षु कुमारकाश्यप स्मृति पत्रकारिता पुरस्कार नेपाल मण्डल टेलिभिजनका सञ्चारकर्मी रामराजा बज्राचार्यलाई प्रदान गरिएको थियो । यस पुरस्कारको राशी २० हजार रुपैयाँ रहेको छ ।

त्यस्तै ललितपुर जिल्लामा पहिलो अपांगमैत्री भवन बनाउने कार्यको अग्रसरता लिएका समाजसेवी मोतिशान्ति शाक्यले आफ्नी आमा र बुबाको नाममा स्थापना गरेको ज्ञानदेवी-मणीरत्न स्थापित स्मृति पत्रकारिता पुरस्कार नेवा:एचडी टेलिभिजनका वरिष्ठ सञ्चारकर्मी नवीन जोशीलाई प्रदान गरिएको थियो । यस पुरस्कारको राशी २० हजार रुपैयाँ रहेको छ । देवशोभा कंसाकारद्वारा स्थापित ज्ञानज्योति-लक्ष्मीप्रभा स्मृति पत्रकारिता पुरस्कार जनसञ्चार टेलिभिजनका सञ्चारकर्मी सुरेश सैंजुलाई प्रदान गरिएको थियो । यो पत्रकारिता पुरस्कारको राशि २० हजार रुपैयाँ रहेको छ ।

त्यसैगरी ललितपुरका बाबुराजा ज्यापू फोटो पत्रकारिता पुरस्कार गोर्खापत्र अनलाईनका फोटोपत्रकार मनोजरत्न शाहीलाई प्रदान गरिएको थियो । यस पुरस्कारको राशी १० हजार रुपैयाँ रहेको छ । विजयराम कर्माचार्यद्वारा स्थापित श्रीरामस्मृति न्हुज पत्रकारिता पुरस्कार चितवनका पत्रकार निशा श्रेष्ठलाई प्रदान गरिएको थियो ।

पत्रकारिता क्रियाशील, नेपाल भाषा, संस्कृति, सम्पदा, सञ्चारमाध्यमको समावेशीकरण, आदिवासी जनजातिको सवालमा पत्रकारिता मार्फत पुऱ्याएको योगदान, लैगिंक भौगोलिक र लगायत पक्षलाई मध्यनजर गरी सो पुरस्कार प्रदान गरिएको पत्रकार दबूले जनाएको छ ।

पुरस्कृत व्यक्तित्वहरुलाई वाग्मती प्रदेश सरकारका श्रम, राजगार तथा यातायातमन्त्री प्रेमभक्त महर्जनले सम्मानपत्र प्रदान गरे भने नगद पुरस्कार भने सम्बन्धित पुरस्कार दाताले प्रदान गरिएको थियो । सो अवसरमा मन्त्री महर्जनले जातीय विविधताको सम्बोधन, सामाजिक न्यायको लागि पत्रकारहरु संवेदनशील हुनुपर्नेमा जोड दिदै समावेशी पत्रकारिताको विकास र मातृभाषाको पत्रकारिताको क्षेत्रको लागि वाग्मती प्रदेश सरकारले ठोस काम गर्ने प्रतिबद्धता व्यक्त गरे ।

नेपालभाषा, संस्कृति, सम्पदाको संरक्षणमा वाग्मती प्रदेश सरकार गम्भीर रहेको उल्लेख गर्दै उनले त्यसको विकास लागि विनियोजित बजेट सदुपयोग गर्न आग्रह गरे । सञ्चारमाध्यम समावेशी बनाउने कार्यमा प्रदेश सरकारको तर्फबाट आफ्नो महत्वपूर्ण पहलकदमी रहने बताउँदै मन्त्री महर्जनले समाजको विकासको लागि जनउत्तरदायी स्वस्थ पत्रकारिता हुनुपर्नेमा जोड दिए ।

सो अवसरमा नेवा: पत्रकार राष्ट्रिय दबूका संस्थापक अध्यक्ष श्रीकृष्ण महर्जनले पत्रकारिता क्षेत्रलाई समावेशी बनाउन नेवा पत्रकार दबूसंगै फोनिजले राज्यको ध्यानाकर्षण गराउँदै आएको बताउँदै समावेशीले राष्ट्रिय एकता, सामाजिक सद्भावलाई बलियो बनाउने धारणा राखे ।

सो अवसरमा केन्द्रीय अध्यक्ष नृपेन्द्रलाल श्रेष्ठले प्रेस स्वतन्त्रताको उच्चत्तम अभ्यासका लागि सञ्चारमाध्यम समावेशी भएर विभिन्न जातजाति र भाषाभाषीको आवाजलाई स्थान दिनुपर्ने र मातृभाषाको पत्रकारिताको विकासका लागि राज्यको ध्यान जानुपर्नेमा केन्द्रीत गर्दै आफ्नो धारणा राखे ।





# गुलाबी चियाले दिन्छ अब तनावबाट छुटकारा !

एजेन्सी । आजकल गुलाब चियाको चलन बढ्दो क्रममा रहेको छ । यो चिया स्वादमा मात्र उत्कृष्ट छैन, स्वास्थ्यको लागि पनि धेरै फाइदाजनक मानिन्छ । मानिसहरू यो चियाको स्वाद लिन महँगा रेस्टुरेन्ट र क्याफेहरूमा जान्छन्, तर के तपाईंलाई थाहा छ यो स्वादिष्ट चिया घरमा सजिलै बनाउन सकिन्छ । आज हामी तपाईंलाई गुलाबी चिया कसरी बनाउने भनेर बताउनेछौं, जुन रेस्टुरेन्ट र क्याफेहरूमा पाइने जस्तै स्वादिष्ट र स्फूर्तिदायी हुनेछ ।

गुलाबी चिया बनाउनको लागि तपाईंलाई ताजा वा सुकेको गुलाबको पात, पानी, मह र चाहनुहुन्छ भने, दालचिनी वा अलैंचीको सानो टुक्रा चाहिन्छ । सबैभन्दा पहिले, यदि तपाईं ताजा गुलाबका पातहरू प्रयोग गर्दै हुनुहुन्छ भने, तिनीहरूलाई राम्ररी धुनुहोस् ताकि कुनै पनि फोहोर वा रसायनहरू नरहोस् । यसपछि, एउटा प्यानमा पानी उमाल्न राख्नुहोस् ।

यसरी उम्लिरहेको पानीमा गुलाबको पात हालेर ५-१० मिनेटसम्म उमाल्नु पर्छ । यसले पानीमा गुलाबका पातहरूको पूर्ण स्वाद ल्याउनेछ । अब चिया छान्नुहोस् र कपमा खन्याउनुहोस् । यस समयमा तपाईंले आफ्नो रोजाइ अनुसार मह वा गुलियोको लागि गुदको प्रयोग गर्न सक्नुहुन्छ ।

यसमा मह वा गुद थप्दा चियामा प्राकृतिक मिठास थपिन्छ, जसले गर्दा यसको स्वाद अझ राम्रो हुन्छ । यदि तपाईं चाहनुहुन्छ भने, अलिकति दालचिनी वा अलैंचीको धुलो पनि थप्न सक्नुहुन्छ, ताकि चियाले अझ ताजापन र सुगन्ध प्राप्त गरोस् ।

यसपछि, तपाईंको गुलाबी चिया तयार हुन्छ । यो तातो चियाको आनन्द लिनुहोस् र ताजा महसुस गर्नुहोस् । गुलाबी चिया स्वादिष्ट मात्र होइन, यसमा धेरै स्वास्थ्य लाभहरू पनि छन् ।

यसबाहेक, गुलाबको पातमा एन्टिअक्सिडेन्ट हुन्छ, जसले शरीरलाई स्वस्थ राख्न मद्दत गर्छ । यो चियाले पाचन प्रक्रियालाई सुधार गर्न मद्दत गर्छ र रोग प्रतिरोधात्मक क्षमतालाई पनि बलियो बनाउँछ । गुलाबको सुगन्धले मानसिक तनाव कम गर्न मद्दत गर्छ र चियाको सेवनले तपाईंको दिमागलाई शान्त राख्छ ।

आयुर्बेद विशेषज्ञका अनुसार गुलाबी चियामा भिटामिन सी पनि पाइन्छ, जुन तपाईंको छालाको लागि धेरै फाइदाजनक हुन्छ । यो चियाले तौल घटाउन पनि मद्दत गर्छ र यसमा एन्टी-इन्फ्लेमेटरी गुणहरू छन् ।

नियमित रूपमा गुलाबी चियाको सेवनबाट तपाईं आफ्नो स्वास्थ्यमा सुधार ल्याउन सक्नुहुन्छ । त्यसैले अर्को पटक चिया पिउन मन लाग्यो भने गुलाबी चिया पक्कै पनि पिउनुहोस् र यसको स्वाद र स्वास्थ्य दुवैको फाइदा उठाउनुहोस् ।

# फोन वा ल्यापटपबाट निस्कने प्रकाशले आँखालाई कसरी हानि पुऱ्याउँछ ?

एजेन्सी । फोन र ल्यापटपबाट निस्कने नीलो प्रकाशले आँखालाई हानि पुऱ्याउन सक्छ । यसले रेटिनालाई कमजोर बनाउँछ, आँखामा जलन, धमिलोपन र निद्राको समस्या निम्त्याउँछ ।

आजकल मोबाइल फोन र ल्यापटप हाम्रो जीवनको एक महत्वपूर्ण हिस्सा बनेका छन् । पढाइदेखि मनोरञ्जनसम्म, हामी सबै कुराको लागि स्क्रिनमा निर्भर भएका छौं । तर के तपाईंले सोच्नुभएको छ कि यी उपकरणहरूबाट निस्कने प्रकाशले तपाईंको आँखालाई कति हानि पुऱ्याउँछ ? यदि तपाईंलाई बारम्बार आँखा पोल्ने, थकित हुने वा धमिलो महसुस हुन्छ भने, यसको कारण तपाईंको फोन वा ल्यापटप हुन सक्छ । यो किन हुन्छ र यसबाट बच्न के गर्न सकिन्छ, यसबारे जानौं ।

नीलो प्रकाश: आँखाको सबैभन्दा ठूलो शत्रु हो

फोन, ल्यापटप र टिभी जस्ता डिजिटल स्क्रिनबाट नीलो प्रकाश निस्कन्छ । यो त्यस्तो प्रकाश हो जुन सिधै हाम्रो आँखाको रेटिनामा पुग्छ र बिस्तारै यसलाई कमजोर बनाउँछ । जब हामी लामो समयसम्म लगातार स्क्रिनमा हेर्छौं, आँखाले बढी काम गर्नुपर्छ, जसका कारण तिनीहरू चाँडै थाक्छन् । यति मात्र होइन, लामो समयसम्म नीलो प्रकाशको सम्पर्कमा रहँदा आँखाका कोषहरूलाई पनि क्षति पुग्न सक्छ, जसले भविष्यमा दृष्टि गुम्ने जोखिम बढाउँछ ।

के तपाईंले कहिल्यै आफ्नो फोन वा ल्यापटप लामो समयसम्म प्रयोग गरेपछि आँखा भारी भएको महसुस गर्नुभएको छ ? यो डिजिटल आँखाको तनावको कारणले हुन्छ । जब हामी लगातार स्क्रिनमा हेरिरहन्छौं, हाम्रो आँखाको मांसपेशीहरू एउटै स्थितिमा काम गरिरहन्छन्, जसले गर्दा उनीहरूले आराम पाउँदैनन् । यसले आँखा थकान, पाल्ने र टाउको दुख्ने जस्ता समस्याहरू निम्त्याउँछ ।

स्क्रिनको प्रकाशका कारण निद्रा पनि बिग्रिरहेको छ ।

यदि तपाईं सुत्नुअघि फोन प्रयोग गर्ने बानीको शिकार हुनुहुन्छ भने, यसले तपाईंको निद्रामा नराम्रो असर पार्न सक्छ । फोन र ल्यापटपबाट निस्कने नीलो प्रकाशले निद्रा ल्याउन मद्दत गर्ने मेलाटोनिन नामक हर्मोनलाई असर गर्छ । मेलाटोनिन उत्पादन घट्दा हामी ढिलो सुत्छौं र राम्रो निद्रा लाग्दैन । यही कारणले गर्दा धेरै मानिसहरू राति अबेरसम्म जागा रहन्छन् र बिहान उठेपछि पनि थकित महसुस गर्छन् ।

सुख्खा आँखा सिन्ड्रोम: स्क्रिनले आँखा सुख्खापन बढाइरहेको छ

जब हामी स्क्रिनमा निरन्तर काम गर्छौं, हामी कम झिम्किन्छौं । आँखा झिम्काउनु धेरै महत्त्वपूर्ण छ किनकि यसले आँखामा आद्रता कायम राख्छ । तर जब हामी कम झिम्क्याउँछौं, आँखा सुख्खा हुन थाल्छ, जसलाई सुख्खा आँखा सिन्ड्रोम भनिन्छ । यसले आँखामा पोल्ने, चिलाउने र रातो हुने समस्या निम्त्याउँछ ।

स्क्रिनबाट आँखा जोगाउने सजिलो तरिका

यदि तपाईं आफ्नो आँखा सधैं स्वस्थ राख्न चाहनुहुन्छ भने, केही साधारण बानीहरू अपनाएर आफ्नो आँखालाई जोगाउन सक्नुहुन्छ । सबैभन्दा पहिले, प्रत्येक २० मिनेटमा २० सेकेन्डको लागि स्क्रिनबाट टाढा हेर्नुहोस् । यसले आँखालाई आराम दिनेछ । यसबाहेक, हानिकारक प्रकाशबाट आफूलाई बचाउन फोन र ल्यापटपमा रहेको नीलो प्रकाश फिल्टर अन गर्नुहोस् ।

सुत्नुअघि फोन प्रयोग गर्न बन्द गर्नु पनि धेरै महत्त्वपूर्ण छ । यसले तपाईंको आँखालाई आराम दिने मात्र होइन, राम्रो निद्रा पनि दिनेछ । साथै, आँखालाई हाइड्रेटेड राख्न स्क्रिनको ब्राइटनेस कम राख्नुहोस् र दिनभरि बारम्बार झिम्काउनुहोस् ।

वर्ष १८ अङ्क ३० २०८१ चैत्र १३ गते बुधबार
25 March 2025, Wednesday
बिमTIMES

# राजाकै पालाका ऐनले चल्दै देश, दलहरु नै चाहदैंनन् परिवर्तन !

**रूषा थापा**

सरकारले २०१८ पुस १३ गते राष्ट्रिय निर्देशन ऐन जारी गर्यो । २०३४ भदौ २७ गते संस्था दर्ता ऐन र २०४९ कात्तिक १७ गते समाज कल्याण ऐन जारी गरिएको थियो । यी ऐनको आआफ्नै उद्देश्य भएपनि सबै सार्वजनिक सेवा दिनका लागि ल्याएको हो । तीन वटै ऐनमा संस्था दर्ता गर्दा सरकारले राजस्व लिँदैन ।

किनकि यसअन्तर्गत संस्था दर्ता गर्दा जनता र देशको हितमा काम गर्ने वा सामाजिक कार्य गर्ने भनिएको हुन्छ । यसरी हजारौंको संख्यामा संस्था दर्ता भएका छन् । तर, संस्था दर्ता गर्ने बेला देश र जनताको सेवा गर्ने भन्ने अनि दर्ता भएपछि चाँहि सिण्डिकेट लगाउने, सर्वसाधारण ठग्ने, लुट्ने, राज्यलाई राजस्व बढ्ने प्रवृत्ति पछिल्ला वर्ष मौलाउँदो छ ।

२०४६ सालमा मुलुकमा राजनीतिक परिवर्तन भयो । पञ्चायती व्यवस्था ढलेर बहुदलीय व्यवस्था आयो । २०६२-०६३ मा बहुदलीय व्यवस्था पनि विस्थापित भयो । १९ दिने जनआन्दोलनले लोकतन्त्र गणतन्त्रको स्थापना गर्यो । बहुदलीय व्यवस्था हुँदा होस् या लोकतन्त्र गणतन्त्र आएपछि सरकारले पटकपटक जनताले तिरेको करबाट निर्वाचन गरायो ।

पञ्चायती व्यवस्था ढलेपछि बहुदलीय व्यवस्थाको स्थापनासँगै पहिलो पटक ०४८ सालमा चुनाव भएको थियो । त्यसपछि ०५१, ०५६, ०६४, ०७०, ०७४, ०७९ सालमा निर्वाचन भयो । जनताले मतदान गरेर जिताएका जनप्रतिनिधि सदनमा पुगे । ०४६ सालयता मुलुकमा धेरै सरकार बनिसकेको छ । तर, पञ्चायतकालमै ल्याइएको ऐन भने अहिले पनि कायमै छ ।

त्यही व्यवस्थाअनुसार अझै पनि मुलुकमा संघसंस्था चलिरहेका छन् । देशमा व्यवस्था फेरियो तर कानून चाँहि फेरिन सकिएन । जनप्रतिनिधि र सरकारले जनतालाई कसरी मुर्गा बनाउँछन् ? भन्ने उदाहरण पनि हो, यो । किनकि राजनीतिक दलहरु र सरकारमा बस्नेहरु आफूहरुले राजतन्त्र फ्यालेर देशमा लोकतन्त्र गणतन्त्र ल्याएको दाबी गर्छन् ।

अनि राजाको पालोको ऐन चाँहि किन अहिलेसम्म टिकिरहेको छ त ? यसको जवाफ अब उनीहरुले जनतालाई दिनैपर्छ । त्यसो त यी ऐनअन्तर्गत दर्ता हुने संघसंस्था सबैभन्दा बढी राजनीतिक दलहरुकै रहेको बताइन्छ । देश र जनताको सेवा गर्ने भन्दै यस ऐनअन्तर्गत दर्ता भएर उनीहरुले जनता ठग्ने र राज्यलाई राजस्व छल्ने काम गरिरहेका छन् ।

यातायात व्यवसायीहरुको छाता संगठन नेपाल राष्ट्रिय यातायात व्यवसायी महासंघ राष्ट्रिय निर्देशन ऐन, २०१८ अनुसार दर्ता भएको हो । यातायात समितिहरु संस्था ऐन, २०३४ अनुरुप दर्ता भएका हुन् । देशभर तीन सय सात वटा यातायात समिति छन् । यो समितिले सिण्डिकेट लगाउँदै आएको छ । नयाँ गाडी हाल्ने धनीसँग दुई लाखदेखि पन्ध्र लाख रुपैयाँसम्म असुल्ने गरेका छन् । जबकी गाडी चलाउन रोडपर्मिट चाँहि पाँच सय रुपैयाँ लिएर सरकारले दिन्छ ।

बाटो सरकारको । रोडपर्मिट दिने अधिकार पनि सरकारकै । तर, जनताको करबाट बनाइएको सडक यातायात व्यवसायीहरुको मनमौजी चलेको छ । सिण्डिकेट लगाएर आफू मात्र कमाउने काम भइरहेको छ, त्यो पनि वर्षौदेखि । यातायात व्यवसायीहरुले एउटा गाडीमा २० लाखदेखि करोडसम्म लगानी गरेका हुन्छन् । एउटै गाडीले दिनको पाँच हजारदेखि लाखसम्म कमाउँछ ।

यिनीहरुले व्यापार गरेको हो, सेवा होइन । उदाहरणका निम्ति सार्वजनिक बसमा भाडा नतिरी चढ्न पाइँदैन । अझ सरकारले तोकेभन्दा बढी भाडा यातायात व्यवसायीहरु यात्रुसँग असुल्छन् । लक्षित वर्गलाई छुट दिँदैन तर त्यसबापत सरकारबाट प्राप्त हुने छुट चाँहि लिन्छन् । अनि यात्रु ठगेर र सरकारलाई छलेर कसरी सेवा हुन्छ ?

भक्तपुरको सूर्यविनायक नगरपालिका-५, सिर्जनानगरमा सडक छेउमै रोपनीका रोपनी जग्गामा महलजस्तो घर देखिन्छ । त्यो घर माताको भन्ने गरिन्छ । माताको नाममा सर्वसाधारणलाई भ्रमित बनाएर ठगिँदै आएको छ । त्यही ठगेर कमाएको पैसाले दरबारजस्तो घर बनाइएको हो । यसरी माताको नाममा सर्वसाधारणलाई लुट्दा त्यसलाई सेवाको दर्जा दिइएको छ । किनकि यही ऐनअन्तर्गत यो पनि दर्ता भएको छ ।

देशभर सञ्चालनमा रहेका एनजीओ र धार्मिक संघसंस्था यिनै ऐनमा दर्ता भएका छन् । एनजीओले गरिबको नाम बेचेर विदेशी डलर ल्याएर पचाउने । जसका कारण नेपालकै बदनाम हुन पुगेको छ । अमेरिकी राष्ट्रपतिले त नेपाललाई ठग नै भनिदिए । यी तीन ऐनअन्तर्गत धेरै संस्था दर्ता भएका छन् । उद्योग वाणिज्य महासंघदेखि अन्य विभिन्न व्यापार व्यवसायीहरुको छाता संगठन, कलाकारहरुको संघसंस्था पनि यसैअन्तर्गत दर्ता भएका छन् ।

कानून व्यवसायीहरुको छाता संगठन नेपाल बार एसोसिएशन, नेपाल पत्रकार महासंघ, नेपाल निर्माण व्यवसायी महासंघ पनि यही ऐनअनुरुप दर्ता भएका हुन् । सम्पूर्ण राजनीतिक दलका भ्रातृ संस्था पनि यीनै ऐनअन्तर्गत दर्ता भएको पाइन्छ । जनताको सेवा र देशको निम्ति काम गर्ने भन्दै दर्ता गर्ने अनि दलको चाकडी गर्ने गरिएको छ ।

एउटा प्रयोजनका निम्ति ल्याइएको ऐन अर्कै कामका लागि प्रयोग भइरहेको छ । सेवा दिने नाममा जनता ठग्ने र राज्यलाई राजस्व छल्ने काम भइरहेको छ । अब सरकारले यो ऐन परिवर्तन गर्नुपर्छ । गम्भीर कुरा चाँहि मुलुकमा यतिधेरै सरकार परिवर्तन हुँदा पनि किन पञ्चायती व्यवस्थाको ऐन परिवर्तन हुन सकेन ।

राजनीतिक दलहरुले चासो नदिएका हुन् कि हाम्रा जनप्रतिनिधिहरुको योग्यताले नभ्याएर हो ? कि आफ्नालाई जति पनि ठग्न लुट्न छुट दिन हो ? अब दल र सरकारमा बस्नेहरुले यसको जवाफ दिनुपर्छ । जनतालाई भ्रममा पारेर लुटिरहने उनीहरुको योजना अब पुरा हुने छैन । मुलुकमा राजतन्त्र पुर्नस्थापित हुने चर्चा पछिल्लो समय व्यापक छ ।

अनि राजाको पालोमा बनेको ऐनले अझै पनि देश चलिरहेको छ भने मुलुकबाट कसरी र कहिले हट्यो राजतन्त्र ? राजनीतिक दलहरु राजालाई दरबारबाट हटाउन मात्र सफल बने । राजाले ल्याएका नीति, ऐन, कानून विस्थापन गर्न वा परिमार्जन, परिवर्तन गर्न उनीहरुले सकेनन् । यसमा सञ्चारमाध्यमहरुको पनि दोष छ ।

सञ्चारमाध्यमहरुले खबरदारी गरिदिनु पर्थ्यो । तर, गरेन । जसका कारण अहिलेसम्म राजाका पालोको ऐनले देश चल्दा राज्यलाई आउनुपर्ने राजस्व गुमेको छ । राजनीतिक दलहरु स्वार्थमा केन्द्रित भए । देखाउने दाँत एउटा, चपाउने अर्कै भनेझैं दलहरुले बाहिर देश र जनताको सेवा गर्ने नकाब ओढेर भित्र आफ्ना कार्यकर्ता पोसे ।

सदन कानून निर्माणको थलो हो । सदनले देश र जनताको हितमा हुने कानून बनाउनुपर्छ । तर, हामी कहाँ चाँहि सदनमा सांसदहरुको जुहारी मात्र चलिरहन्छ । कानून निर्माणभन्दा पनि एकअर्कालाई आरोपप्रत्यारोप लगाउनमै सांसदहरु व्यस्त हुन्छन् । अनि यस्ता सांसद र सरकारबाट कसरी देश बन्छ ?

अझै पनि सदनले कानून निर्माण ढिलो गर्ने हो भने वा पञ्चायतकालका ऐन परिवर्तन नगर्ने हो भने जनताले गम्भीर कदम चाल्न पनि समय लगाउने छैन । किनकि जनता आजित भइरहेका छन् । त्यसैले, अब पञ्चायती व्यवस्थाका ऐन परिवर्तन गर्न ढिलो नगरौं ।

## नेपालको...

समुदाय रहेका छन् ।

संघीय संस्कृति मन्त्रालयले जारी गरेको सूचनाप्रति स्थानीय समुदायको ध्यानाकर्षित तुल्यायो भन्ने आधार पाइन्न । प्रादेशिक अभौतिक सांस्कृतिक सम्पदा, स्थानीय अभौतिक सांस्कृतिक सम्पदाहरूको सूचीकरण पहिलो आधार हुनुपर्छ । त्यो काम गर्न प्रदेश सरकार र स्थानीय सरकारबिच समन्वय भएको भए त्यो काम प्रभावकारी हुनसक्छ ।

अभौतिक सांस्कृतिक सम्पदाप्रति समुदायलाई सुसूचित गराउने काम स्थानीय वडापालिकाहरूको दायित्वमा पर्नुपर्ने हो । यदि त्यसो भएको छैन भने संघीय मन्त्रालयको त्यसतर्फ ध्यान पुग्न जरुरी छ । सम्पदा सूचिकरण गर्ने आधार हरूमा सम्बन्धित समुदायको पहिचानसँग सम्बन्धित भएको हुनुपर्नेछ । सम्पदाको सुरक्षा र संरक्षण सुनिश्चितता भएको हुनुपर्नेछ । अभौतिक सांस्कृति सम्पदासँग सम्बन्धित समूह, समुदाय वा व्यक्तिको सहमतिसहित सभागिता रहेको हुनुपर्नेछ । सम्बन्धित समूह वा समुदायको सामाजिक, धार्मिक वा सांस्कृतिक जीवनको एउटा महत्वपूर्ण अंगको रूपमा रहेको हुनुपर्नेछ। सम्बन्धित समुदायभित्र निरन्तर रूपमा अभ्यास हुँदै आएको र पुस्तान्तरणको प्रतिबद्धता व्यक्त गरेको हुनुपर्दछ । सम्पदामाथि गम्भिर खतरा आइपरेको र तत्कालै संरक्षण नगरी नहुने अवस्था रहेको वा सम्बन्धित व्यक्ति, समुदाय तथा पक्षहरूले प्रयास गर्दागर्दै पनि गम्भिर जोखिममा रहेको सम्पदालाई तत्कालै संरक्षण गर्नुपर्ने सम्पदाका रूपमा सूचिकरण गर्न सकिने उल्लेख पाइन्छ ।

सूचिकरणका निम्ति सम्पदाको पूर्ण विवरण, सूचिकरणका लागि सम्बन्धित व्यक्ति, समूह वा समुदायको सहमति चाहिन्छ । सम्पदाको फोटो, अडियो तथा भिडियो हुनुपर्ने छ । हालसम्मको पुस्तान्तरण सम्बन्धी विवरण, सम्बन्धित स्थानीय तहको सिफारिस हुनुपर्ने छ । स्थानीय तहमा सूचिकरण भइसकेको भएमा सोको प्रमाणपत्र पेश हुनुपर्ने भनिएको छ ।

नेपालको सन्दर्भमा राष्ट्रिय संस्कृति नीति २०६७ विद्यमान छ । विभिन्न जाति र समुदायका परम्परागत भौतिक र अभौतिक सांस्कृतिक सम्पदाहरूको अध्ययन र संरक्षण गरी एक-अर्कामा सम्मान, सद्भाव र सहिष्णुताको भावना जागृत गराइ सामाजिक मर्यादा अभिवृद्धि गर्दै देशलाई सांस्कृतिक एकताको सूत्रमा गाँस्नु राष्ट्रिय नीतिको लक्ष्य रहेको छ । नेपाल संयुक्त राष्ट्रसंघको पक्षराष्ट्रको हैसियतले अमूर्त सांस्कृतिक सम्पदा सम्बन्धी महासन्धि २००३ लाई अंगिकार गरेको छ ।

युनेस्कोका सहजकर्ता संस्कृतिविज्ञ डा. सोमबहादुर धिमालको शब्दमा नेपालको भौगोलिक रूपमा हिमाल, पहाड र तराईको फरक-फरक विशेषता छन् । हिमाली क्षेत्रमा पाइने जातजातिहरू शेर्पा, शिङसाभोटे, डोल्पो, मुगाली आदि पर्दछन् । पहाडी क्षेत्रमा क्षेत्री, बाहुन, विश्वकर्मा, राई, लिम्बु, नेवार, तामाङ, मगर, गुरुङ, लेपचा, थामी, राउटे, राजी, थकाली, छन्त्याल, ह्योल्मो, दुरा, जिरेल, दमाई आदि पर्दछन् । यसैगरी तराईमा थारु, राजवंशी, धिमाल, मेचे, उराँव, ताजपुरिया, कुशवाह, बोटे, चेपाङ, दराई, सन्थाल, किसान, रानाथारु, गनगाइ, यादव, झा, तेली, सार्की आदि पर्दछन् । यी सबै जातजातिहरूको भाषा, धर्म, पेसा, खानपिन परिकार, भेषभूषा, चाडपर्वहरू, देवीदेवताहरू, लोकनृत्य, लोककला तथा साहित्य, जीविकोपार्जन गर्ने पुर्खाको ज्ञान, सिप, कला र स्थानयि प्रविधिहरू फरक-फरक पाइन्छन् । वनस्पति, बोटबिरुवाहरू, हावापानी फरक पाइन्छन् ।

दन्त्यकथा, उखानटुक्का, लोककथा, लाकेगाना, लोकमुन्धुम, लोकमन्त्रहरू, लोकलय तथा भाकाहरू, लोक इतिहास, उत्पत्ति कथाहरू, भजनकीर्तन, धार्मिक प्रवचनहरू रहेका हुन्छन् । मुन्धुम वाचन कला, नाक्सो, फेदाङवा, झाँक्री, ओझाले जोखाना हेर्दा, फलाक्दा र उपचार गर्दा तन्त्रमन्त्र कला ती सबै अमूर्त सम्पदा हुन् ।

सरकारले अमूर्त सम्पदाहरू सूचीकरण गर्ने अभियानको थालनी गर्नु उचित छ । तर सम्बन्धित समुदायसम्म ज्ञान, चेतना र जागरण पैदान भइनसकेको स्थिति छ । हिन्दु वर्णाश्रमको थिचोमिचो र अतिक्रमणले आफ्नोपन गुमाएका जातजाति, भाषाभाषीहरू छन् । उदाहरणका लागि पल्लोकिरात, माझकिरात र ओल्लाकिरात क्षेत्रका ऐतिहासिक गढीहरूलाई देवीथान अनि साकेला थानहरूलाई चण्डीथान बनाइएकै छन् ।

उनीहरूका भौतिक र अभौतिक अर्थात् अमूर्त सम्पदाहरूमाथि जित्ने समुदायहरूको हालीमुहाली रहेको बेला फेरि पनि म्याद जारी गरेर अभौतिक सांस्कृतिक सम्पदा सूचीकरण गर्न भन्नु थिचोमिचोकै निरन्तरतामा दरिने निश्चित छ । यसबारे संविधानसम्मत विशेष गरी अल्पसंख्यक समुदायमा चेतना विस्तार तथा जागरण पैदा गर्नु राज्यको दायित्व हो ।

त्यसतर्फ सचेत हुनुपर्ने पर्छ नकि चिनो चौतारी भन्दै सबैको पाइतालामुनि पार्ने कुचेष्टा नबनोस् । मध्यपहाडी लोकमार्ग भन्दै विस्तार गरिएको पुष्पलाल मार्ग या मदनभण्डारी मार्ग या बीपी मार्ग जेजे नाममा मार्ग विस्तार गरिदैछ । त्यसले आदिवासी क्षेत्रका मूर्त र अमूर्त सम्पदाहरू मास्ने काम गरेको पनि जगजाहेर छ । सूचना जारी गरेर सर्वसाधारणको आँखामा छारो हाल्ने र उनीहरूको सम्पदालाई मास्ने काम राज्यको प्राथमिकतामा पारेको भनेर बुझ्ने स्थिति कदाचित मान्य हुन्न । यसतर्फ गम्भीरतापूर्वक सोचियोस् ।

इन्डिजियसभ्वाइस

# आईपीएलबाट हराएका ५ टिम

एजेन्सी । आईपीएलको १८ औं सिजन शनिबारबाट सुरु भएको छ । उद्घाटन खेल कोलकातामा कोलकाता नाइट राइडर्स र रोयल च्यालेन्जर्स बैंगलुरु सन् २००८ मा खेलिएको आईपीएलको पहिलो सिजनदेखि नै दुवै टोली यस प्रतियोगिताको हिस्सा बन्दै आएका छन् । यस पटक १० टोलीले भाग लिनेछन् । तर आईपीएलको १८ वर्षको इतिहासमा ५ टोलीहरू यस्ता छन् जुन अब प्रतियोगिताको हिस्सा छैनन् ।

आईपीएलबाट गायब भएका ५ टिमको कथा :

१. कोची टस्कर्स केरला

रेन्डेजभस स्पोर्ट्स वर्ल्ड कम्पनीले सन् २०१० मा कोची टोलीलाई १५५५ करोड भारतीय रुपैयाँमा किनेको थियो । २०११ सिजनमा टोलीहरूको संख्या ८ बाट बढाएर १० गरिएको थियो । कोची प्रतियोगिताको नवौं टोली थियो । माहेला जयवर्धनेको कप्तानीमा टोलीमा ब्रेन्डन म्याकुलम, रविन्द्र जडेजा, मुथैया मुरलीधरन, आरपी सिंह र श्रीशान्त जस्ता स्टार खेलाडीहरू थिए । यसका बाबजुद टोलीले १४ खेलमध्ये केवल ६ खेल जित्न सक्यो र अंक तालिकामा ८ औं स्थानमा रहेर प्लेअफमा पुग्न सकेन । कोचीले केवल एक सिजनमात्र खेल्यो ।

फ्रान्चाइजी मालिकहरूले बीसीसीआईबाट बैंक ग्यारेन्टी नवीकरण गर्न सकेनन् । मालिकले मार्च २६, २०११ सम्ममा बैंकमा ग्यारेन्टी बुझाउनुपरेको थियो । बोर्डले लगभग ६ महिना पर्ख्यो, तर कन्ट्र्याक्टको १५६ करोड रुपैयाँ प्राप्त भएन । जसका कारण १९ सेप्टेम्बर २०११ मा भएको वार्षिक बैठकमा बीसीसीआईले टोलीलाई खारेज गर्‍यो ।

जुलाई २०१५ मा, न्यायाधीश आरसी लाहोटीले फ्रान्चाइजीको पक्षमा फैसला सुनाए । अदालतले बीसीसीआईले टोलीलाई क्षतिपूर्तिको रूपमा ५५० करोड रुपैयाँ तिर्न आदेश दियो । फ्रान्चाइजीले क्षतिपूर्तिको बदलामा आईपीएलमा फर्कन खोजेको थियो, तर बीसीसीआईले टोलीलाई पुनः प्रवेश दिएन ।

२. पुणे वारियर्स इन्डिया

सहारा इन्डियाले सन् २०१० मा पुणेस्थित फ्रान्चाइजीलाई लगभग १,७०० करोड भारतीय रुपैयाँमा किनेको थियो । पुणे वारियर्स इन्डिया २०११ को आईपीएलमा सामेल हुने १० औं टोली थियो । युवराज सिंह, सौरभ गांगुली र आरोन फिन्च जस्ता खेलाडीहरूरहेको टोलीमा रोबिन उथप्पा, मनीष पाण्डे, स्टिभ स्मिथ, भुवनेश्वर कुमार र आशिष नेहरा जस्ता खेलाडीहरू पुणेको हिस्सा थिए । यसका बाबजुद पनि, टोलीले ३ सिजनमा २६% खेल मात्र जित्न सक्यो । टोली हरेक पटक ८ औं वा ९ औं स्थानमा रह्यो ।

सन् २०१३ मा पुणे फ्रान्चाइजका मालिक सुब्रत रोयले १७०.२ करोड रुपैयाँको बैंक ग्यारेन्टी नवीकरण गर्न सकेनन् । यसको अन्तिम मिति मे २ थियो, बीसीसीआईले मे २० सम्म पर्ख्यो र त्यसपछि अघिल्लो ग्यारेन्टीको पैसा आफ्नो खातामा ट्रान्सफर गर्‍यो । बीसीसीआईको यो कदमपछि सुब्रत रोयले आईपीएलबाट आफ्नो टोलीको नाम फिर्ता लिए । २६ अक्टोबरमा, बीसीसीआईले पुणे वारियर्सलाई पनि खारेज गर्‍यो ।

३. डेक्कन चार्जर्स

डेक्कन क्रोनिकल होल्डिंग्स लिमिटेडले डेक्कन चार्जर्स फ्रान्चाइजीलाई १००० करोड भारतीय रुपैयाँमा अधिग्रहण गरेको थियो । यो टोली २००८ मा पहिलो सिजनदेखि नै प्रतियोगिताको हिस्सा रहेको छ । टोलीले एडम गिलक्रिस्ट र कुमार संगकाराको कप्तानीमा ५ सिजन खेलेको थियो । डेल स्टेन, रोहित शर्मा, साइमन्ड्स, हर्शेल गिब्स, प्रज्ञान ओझा र शाहिद अफ्रिदी जस्ता खेलाडीहरू टोलीको हिस्सा थिए । यसको बावजुद, टोलीले ३८% खेल मात्र जित्न सक्यो ।

डेक्कनको सबैभन्दा राम्रो सिजन २००९ मा आयो, जब यो प्रतियोगिता दक्षिण अफ्रिकामा खेलिएको थियो । त्यसपछि टोली चौथो स्थानमा रहँदै सेमिफाइनलमा पुग्यो । गिलक्रिस्टको कप्तानीमा टोलीले सेमिफाइनलमा दिल्लीलाई र फाइनलमा बैंगलोरलाई हराएर उपाधि जितेको थियो । टोलीले २०१० संस्करणको सेमिफाइनलमा पनि स्थान बनाएको थियो तर चेन्नईसँग पराजित भएको थियो । यी २ सिजन बाहेक, टोली हरेक पटक ७ औं वा ८ औं स्थानमा रह्यो ।

जुन २०१२ मा, डेक्कन क्रोनिकलले आफ्नो फ्रान्चाइजी बेच्दैछ भन्ने खबर आयो । अगस्टसम्म टोलीले आफ्ना केही खेलाडीहरूलाई तलब पनि तिर्न सकेको थिएन । बीसीसीआईले उनलाई सकेसम्म चाँडो तलब तिर्न चेतावनी दियो । ऋणमा डुबेको फ्रान्चाइजले बीसीसीआईबाट स्वीकृति पाएपछि सेप्टेम्बरमा टोली बेच्ने प्रस्ताव राखेको थियो । टोलीले १०० करोड रुपैयाँको बैंक ग्यारेन्टी पनि नवीकरण गर्न सकेन ।

१२ अक्टोबर २०१२ मा, बीसीसीआईले आधिकारिक रूपमा डेक्कन चार्जर्सलाई समाप्त गर्‍यो । अक्टोबर १४ मा टोली खरिद गर्न टेन्डर पनि निकालिएको थियो । २५ अक्टोबरमा, सन टिभी नेटवर्क लिमिटेडले ५ वर्षको लागि ४२५ करोड रुपैयाँमा हैदराबाद फ्रान्चाइजी किन्यो । टोलीको नाम सनराइजर्स हैदराबाद थियो । डेक्कन चार्जर्सका खेलाडीहरू २०१३ मा सनराइजर्स टोलीको हिस्सा बने ।

जुलाई २०२० मा, डेक्कन क्रोनिकल समूहले बीसीसीआईविरुद्धको अदालती मुद्दा जित्यो । अदालत बोर्डले डेक्कन क्रोनिकल समूहलाई ४८१४ करोड रुपैयाँ क्षतिपूर्ति तिर्नुपर्ने आदेश दियो । बीसीसीआईले सर्वोच्च अदालतमा निवेदन दियो । जुन २०२१ मा, फ्रान्चाइजीले क्षतिपूर्तिको रूपमा केवल ३६ करोड रुपैयाँ पाउने निर्णय गरियो । यद्यपि, यसले डेक्कन चार्जर्सलाई आईपीएलमा फर्कने बाटो खोलेन ।

४. गुजरात लायन्स

सन् २०१६ मा, इन्टेस्ट टेक्नोलोजीका मालिक केशव बंसलले गुजरात लायन्स किनेका थिए । राजकोटमा रहेको फ्रान्चाइजीले सुरेश रैनाको कप्तानीमा दुई सिजन खेलेको थियो । गुजरातले रवीन्द्र जडेजा, ड्वेन स्मिथ, म्याकुलम र ड्वेन ब्राभो जस्ता खेलाडीहरूलाई रिटेन गर्‍यो । इशान किशन, दिनेश कार्तिक, आरोन फिन्च जस्ता स्टार खेलाडीहरू पनि टोलीमा थिए ।

पहिलो सिजनमा नै गुजरात अंक तालिकाको शीर्ष स्थानमा थियो । टोलीले ९ खेल जित्यो, तर २ प्लेअफ खेल हारेको थियो । गुजरात क्वालिफायर-१ मा बेंगलुरुसँग र क्वालिफायर-२ मा हैदराबादसँग पराजित भयो । दोस्रो तथा अन्तिम सिजनमा टोलीले केवल ४ खेल जित्न सक्यो र अंक तालिकामा ७ औं स्थानमा रह्यो ।

सन् २०१६ मा म्याच फिक्सिङ काण्डमा मुछिएपछि चेन्नई सुपर किंग्स र राजस्थान रोयल्सलाई २ सिजनको लागि प्रतिबन्ध लगाइएको थियो । आईपीएलले उनीहरूको ठाउँमा दुई नयाँ टोलीलाई अवसर दियो । ती मध्ये एक गुजरात लायन्स थियो । २०१८ मा, चेन्नई र राजस्थानले पुनरागमन गरे, जसले लायन्सको यात्रा समाप्त गर्यो । गुजरातमा आधारित फ्रान्चाइजी २०२२ मा आईपीएलमा प्रवेश गरेको थियो, तर यसको स्वामित्व सीभीसी क्यापिटल्ससँग नै रह्यो । यसै कारणले गर्दा टोलीको नाम गुजरात टाइटन्स राखिएको थियो ।

५. राइजिङ पुणे सुपरजायन्ट्स

सन् २०१६ मा, आरपीएसजी समूहका संजीव गोयनकाले पुणेस्थित फ्रान्चाइजी किनेका थिए । उनले टोलीको नाम राइजिङ पुणे सुपरजायन्ट्स राखे ।

पहिलो सिजनमा, टोलीले एमएस धोनीको कप्तानीमा खेल्यो । अजिंक्य रहाणे, फाफ डु प्लेसिस, बेन स्टोक्स, स्टिभ स्मिथ, केभिन पिटरसन, रवि आश्विन जस्ता खेलाडीहरू टोलीको हिस्सा थिए । यसका बाबजुद पनि, टोलीले पहिलो सिजनमा १४ मध्ये ५ खेल मात्र जित्न सक्यो र ८ टोलीमध्ये ७ औं स्थानमा रह्यो । अर्को सिजनमा स्मिथले कप्तानी गरे र टोलीलाई प्लेअफमा पुर्‍याए । टोलीले क्वालिफायर-१ मा मुम्बई इन्डियन्सलाई २० रनले पराजित गर्दै फाइनलमा स्थान बनाएको थियो ।

फाइनलमा पुणेको सामना मुम्बईसँग भयो । टोलीले मुम्बईलाई १२९ रनमा सीमित गर्‍यो । १९ ओभर पछि पुणेको स्कोर ११९/३ थियो । ६ बलमा ११ रन आवश्यक थियो, मिचेल जोनसन बलिङ गर्न आएर किफायती बलिङ गरे । जितको धेरै नजिक भए पनि, पुणेले च्याम्पियन बन्ने मौका गुमायो ।

गुजरात लायन्स जस्तै, राइजिङ पुणे सुपरजायन्ट्सलाई पनि २ सिजनको लागि मात्र आईपीएलको हिस्सा बनाइएको थियो । टोलीले चेन्नई र राजस्थानमध्ये एकलाई प्रतिस्थापन गरेको थियो । त्यसैले, २०१८ मा दुवै फर्किएसँगै पुणेको यात्रा समाप्त भयो ।

यद्यपि, फ्रान्चाइज मालिक संजीव गोयन्काले २०२२ मा लखनउस्थित आईपीएल टोली किनेका थिए । उनले टोलीको नाम लखनऊ सुपरजायन्ट्स राखे । यो टोलीले पनि उपाधि जित्न सकेको छैन ।

## कुलमानको..

सडकमा पनि देखिएको छ । यो प्रदर्शन रोकिनेभन्दा झन् चर्किने निश्चितप्रायः छ ।

संसद्मा रहेको पहिलो र दोस्रो दल संविधान संशोधनको एजेण्डा लिएर एकसाथ सरकारमा जाँदै गर्दा धेरै आश्वासन बाँडेका थिए । आफूहरू मिल्नुको औचित्य प्रष्ट्याउँदै उनीहरूले भ्रष्टाचार नियन्त्रण र सुशासन कायम गर्दै विकास निर्माण अभियानलाई तीव्रता दिने र अर्थतन्त्रमा सुधार गर्ने बताएका थिए । दुई ठूला दल मिल्दै गर्दा केही आशंकाबीच पनि नागरिकले धेरै अपेक्षा गरेका थिए तर यी सबै काममा शक्तिशाली सरकार कमजोर देखियो । सरकार आफ्नै मूल्यांकनमा पास हुन सकेन ।

चालू आर्थिक वर्षको पहिलो ६ महिना (साउनदेखि पुससम्म)मा सम्पन्न हुनुपर्ने प्रगति विवरणअनुसार प्रधानमन्त्री केपी ओलीसहित १२ मन्त्रालयले 'पासमार्क'समेत ल्याउन सकेनन् । यो प्रधानमन्त्री तथा मन्त्रिपरिषद् कार्यालयकै रिपोर्टले देखाएको हो । स्वमूल्यांकनमै पास हुन नसकेको सरकारप्रति नागरिक खुसी हुने कुरै भएन । क्रमशः बढ्दै गएको असन्तुष्टि राजावादीहरूको आन्दोलनमा छचल्कियो । फागुन २५ गते पूर्वराजा ज्ञानेन्द्र शाहको स्वागतका नाममा विमानस्थलमा देखिएको त्यही भीडबाट राजावादीहरू हौसिएका छन् ।

यस्तो अवस्थामा सरकार जनभावनालाई ध्यानमा राखेर अघि बढ्नुपर्नेमा उल्टो निर्णय किन लियो ? अहिलेको परिस्थितिमा पनि राज्यसत्तामा रहेकाहरू जनचाहनाविपरीत चल्नुमा सीमित व्यक्तिको स्वार्थ र आर्थिक चलखेलले काम गरेको ठान्छन् राजनीतिक विश्लेषकहरू । कुलमानलाई बर्खास्त गर्ने सरकारको निर्णयबाट ९९.९९ प्रतिशत जनता खुसी नरहेको बुझाइ राजनीतिक विश्लेषकहरुको छ । दलहरूको चरित्र नै स्वार्थ पूरा गर्न जेसुकै गर्ने खालको रहेकाले यसमा अहिले यस्तो निर्णय लिनुमा त्यसैले काम गरेको हुन सक्छ ।

बर्तमानमा देशको अवस्था सही नभएको र सरकारको असफलताको फाइदा उठाउन पनि राजावादी दलहरु र हिजोकै राजतन्त्र सही थियो भन्ने भ्रम समाजमा फैलाउन लागि परेकाहरुका लागि बर्तमानमा सरकारले गरेको निर्णयले आम जनमानसमा सरकार प्रतिको वितृष्णा बढाउनमा भूमिका खेल्ने राजनीतिकहरुको विश्लेषण रहेको छ ।

विगतमा नेपाली जनताले बुझेको भनेको कुलमानको आगमनपछि नेपाल अँध्यारोबाट उज्यालोतिर गएको थियो । त्यसमा अरूको पनि भूमिका थियो होला तर देशमा सर्वत्र निराशा छाइरहेका वेला सबैतिरबाट आन्दोलनको माहोल बनिरहेका वेला सरकारले त्यसमा मट्टितेल थप्ने काम गरेको र बिचौलियाको स्वार्थ र सत्तामा रहेकाहरूको लालचकै कारण सरकार जनभावनाविपरीतको निर्णय लिन पुगेको ठान्छन् ।

प्रमुख प्रतिपक्षी दल नेकपा माओवादी केन्द्रको सिंगो पंक्तिले कुलमान घिसिङको बर्खास्तीलाई लिएर विरोध जनाएको छ । पूर्वप्रधानमन्त्रीसमेत रहेका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'देखि सबै पदाधिकारी तथा नेता-कार्यकर्ताले सरकारले गलत निर्णय गरेको भन्दै आक्रोश पोखे । त्यस्तै विपक्षमै रहेको राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा)का सभापतिले मैनबत्ती बालेर सांकेतिक विरोध गरे भने अन्य पदाधिकारी तथा सांसदहरूले पनि कुलमान हटाउने निर्णयको विरोध गरे । राप्रपा पनि सरकारले गरेको निर्णयको विपक्षमै उभिएको छ । विपक्षमा रहेकाहरूले विरोध गर्नु स्वाभाविक भए पनि सत्तामै रहेका नेताहरूले समेत सरकारको निर्णयमा असन्तुष्टि जनाएका छन् । सत्तासाझेदार कांग्रेसका महामन्त्रीद्वय विश्वप्रकाश शर्मा र गगन थापाले सरकारको यो निर्णयमा विमति राखेका हुन् । शर्माले 'असन्तुष्टिलाई निराशाको भाष्य बनाएर, प्रतिगमनको खेती गर्नेहरूलाई निरुत्साहित गर्नुपर्ने वेला सरकारले गलत निर्णय लिएको' बताएका छन् । उनले घिसिङलाई हटाउन कांग्रेस पदाधिकारी तहको सहमति नरहेको भन्दै सरकारको निर्णय समयोचित नभएको उल्लेख गरेका छन् ।

उनले भनेका छन्, 'कुलमान घिसिङलाई पदबाट हटाउन कांग्रेस पदाधिकारी तहको सहमति थिएन । बाँकी पदावधि काम गर्न दिन र नहटाउन आन्तरिक तथा सार्वजनिक रूपमै सजग गराइएको थियो । कारबाहीयोग्य केही भए, पछि पनि गर्न मिल्थ्यो । केही राम्रा प्रयास छायाँमा पार्ने गरी सरकारले कुलमान हटाउनु हुन्न थियो । सरकारको यो निर्णय समयोचित बिल्कुलै भएन । असन्तुष्टिलाई निराशाको भाष्य बनाएर प्रतिगमनको खेती गर्नेहरूलाई निरुत्साहित गर्नुपर्ने वेला सरकारले गलत निर्णय जो लियो, यसप्रति खुला र प्रष्ट रूपमा विमति छ ।'

अर्का महामन्त्री थापाले असन्तुष्टिको आगोमा मट्टितेल हाल्ने काम सरकारले गरेको टिप्पणी गरेका छन् । निर्णय गलत रहेको भन्दै उनले उल्टो बाटो हिँडेर सही गन्तव्यमा नपुगिने बताएका छन् । 'आमनागरिकमा असन्तुष्टि बढ्दो छ । त्यही असन्तुष्टिको तावामा स्वार्थको रोटी सेक्न उद्यत एउटा तप्का सलबलाइरहेको छ । यस्तो वेला सरकारको डेलिभरीबाट त्यो असन्तुष्टिलाई सम्बोधन गर्दै आगो नै निभाइदिऊ भनेर हामी दिनरात नभनी मेहनत गर्ने सरकार चाहिँ आफैं असन्तुष्टिको आगोमा मट्टितेल हाल्ने काम गर्ने ? हामीले यस्तो नगरौं है भन्दा सुनेको जस्तो पनि गर्ने तर निर्णय फेरि यस्तो गलत गर्ने?', उनले भनेका छन्, 'मन्त्रीहरूले बाटो बिराउँदा प्रधानमन्त्रीले सम्हाल्नुपर्ने हो... तर विडम्बना त्यो भएन, निर्णय गलत छ, सरकार! उल्टो बाटो हिँडेर सही गन्तव्यमा पुगिँदैन ।'

संस्थापन इतर समूहका नेता डा. शेखर कोइरालाले घिसिङ हटाउने सरकारको निर्णयलाई 'कुशासनको निरन्तरताको अर्को कडी' भनेका छन् । सामाजिक सञ्जालमा उनले लेखेका छन्, 'सरकारको कुशासनको निरन्तरताको अर्को कडी : कुलमान घिसिङलाई हटाउने सरकारी निर्णयको पुष्टि न कहिल्यै सरकारले गर्न सक्छ, न पार्टीले । नेपाली कांग्रेसले त यसको स्वामित्व लिनै हुन्न । यसरी कति दिन चल्ने र चलाउने ? विनाशकाले विपरीत बुद्धि ।' यद्यपि कांग्रेसजनको विमतिलाई 'म कुटेजस्तो गर्छु, तँ रोएजस्तो गर' मात्र गर्न खोजिएको भनेर धेरैले कटाक्ष गरेका छन् । किनकी विरोध त गऱ्या छन्, तर यसमा उनीहरूले रोक्नै चाहिँ रोकेनन् ? त्यसकारण कांग्रेस महामन्त्रीहरूले पनि जनताको अगाडि आफूलाई चोखो देखाउन मात्र भनेको देखिन्छ । साँच्चिकै चाहेको भए सत्तासीन दलका नेताहरूले निर्णय रोक्न सक्ने थिए । किनकी आम जनसमुदायको विरोध पछि केही नेताहरुलाई विमती राख्न दिएर कांग्रेस चोखिन खोजेको आशका छ । यो कांग्रेसको दोहोरो चरित्रको रुपमा आम जनसमुदायले बुझेको छ । किनकी उर्जामन्त्री दिपक खड्का नेका कै नेता हुन् । अर्को तर्फ नेकपा एमालेका नेता तथा कार्यकर्ताहरु यस विषयमा मौन छन् । यसबाट नेकपा एमाले यसमा पूर्ण सहमत रहेको देखाउँछ ।

## भाषा...

अभियन्ता पौभा सायमीको अध्यक्षतामा भएको थियो । प्रमुख अतिथी महर्जनले भाषा मासिएपछि जातमात्रको खासै अस्थित्व नहुँने भन्दै भाषा संरक्षण र प्रवर्द्धनमा नेवार समुदाय सचेत हुनुपर्ने तर्क गरे । 'भाषा, संस्कृति भनेको जात, समुदायसँगै देशको साझा सम्पती हो, उनले थपे, 'तर राज्य र सरकारलाई खबरदारी गर्दै नेपाल भाषाको विकास र विस्तारमा नेवार समुदाय पनि उत्तिकै सक्रिय हुनुपर्दछ ।' नेपाल देशको अस्थित्व विश्वसामु राख्न संयुक्त राष्ट्रसंघमा नेपालले नेपाल भाषा पेश गरेको सन्दर्भको चर्चा गर्दै वडा अध्यक्ष महर्जनले आफ्नो भाषा र संस्कृतिमा गर्व गर्दै अघि बढ्न सकेमात्र विकासले दीर्घकालिन गति लिने बताए ।

भाषा अभियन्ता पौभा सायमीले नेपाल भाषाको महत्त्व नेवार जातिको लागि मात्र नभएर देशकै सम्पत्ति भएकोले सबै सचेत र जिम्मेवार हुनुपर्ने बताए । 'भाषा विलिन हुनु भनेको सम्पदा, संस्कृति, विचार बिलिन हुनु हो, उनले भने, 'त्यसैले नेपाल भाषा सिक्न र जगेर्ना गर्न सबैले भुमिका खेल्न ढिला गर्नु हुन्न ।'

अंग्रेजी, जर्मन, कोरियन, जापानिज भाषा पढेर विदेशिनेको संख्या अत्याधिक बढेकोप्रति उनले आफ्नो भाषाप्रति गर्व गर्ने र प्रयोग, संरक्षण नगर्नाले आफ्नै अस्थित्व लोप हुने भन्दै चेतावनी दिए ।

कार्यक्रममा नेपाल भाषा एकेडेमीका प्राज्ञ विद्या चित्रकार, पाटन क्याम्पसका प्राध्यापक किशोर नेपाली, नेपाली काँग्रसका नेता अशोक शाक्य, सामाजिक विकास मन्त्रालयकी लैङ्गीक सम्पर्क व्यक्ति चन्द्र कुमारी व्यञ्जनकार, नेवाः देय् दबुः बागमती प्रदेशका प्रमुख सचिव गणेशकुमार श्रेष्ठ लगायतले मन्तव्य व्यक्त गरेका थिए ।

मकवानपुरसहित नुवाकोट, दोलखामा पनि कार्यक्रम सम्पन्न भएको नेपाल भाषा एकेडेमीका व्यवस्थापक शान्तराज शाक्यले बताए । कार्यक्रम आयोजना गरिने ९ जिल्ला मध्ये चितवन, धादिङ र काभ्रेपलाञ्चोकमा पनि सम्पन्न भईसकेको उनले बताए । रामेछाप, सिन्धुली र थप एक जिल्लामामा चाँडै कार्यक्रम गरिने बताईएको छ ।

## मध्यपुर...

नगर भित्रका विभिन्न ऐतिहासिक मठमन्दिर, पाटी पौवा, सतल, देवघर, चैत्य, विहारलगायतका सम्पदा पुनर्निर्माण तथा जिर्णोद्धार कार्यलाई निरन्तरता दिदै आएको छ । नगरपालिकाले पर्यटन विकासका साथसाथै स्थानियको जीवनस्तर उकास्नका लागि विभिन्न समयमा मेला महोत्सबहरु आयोजना गर्दै आईरहेको छ । केहि समय अगाडि मात्रै ३ दिने मध्यपुर महोत्सब भव्य रुपमा आयोजना गरेको नगरपालिकाले बाताबरण संरक्षणको क्षेत्रमा पनि उल्लेखनीय कार्यहरु गर्दै आईरहेको छ ।

## समाजलाई...

दृष्टिकोणका शासक पार्टीका मन्त्रीहरूबाट कामदार जनताको हित हुनेछैन । सङ्घर्षबिना आमूल परिवर्तन सम्भव नहुने भएकोले क्रान्तिको आधारशिला तयारी गर्नु सच्चा देशभक्तहरूको कर्तव्य हो", अध्यक्ष बिजुक्छे"ले भने ।

नैतिक, बौद्धिक र शारीरिकरूपमा सक्षम भएमात्र विरोधीहरूसँग प्रतिस्पर्धा गर्न सकिने भएकोले कलेजले नयाँ पुस्तालाई हरेक क्षेत्रमा अब्बल बनाउनु जरूरी भएको उनले बताए । समाजलाई आमूल परिवर्तनको लागि निःस्वार्थपूर्वक सेवा गर्ने नयाँ पुस्ता तयार गर्नु ख्वप कलेजहरूको उद्देश्य हुनुपर्ने उल्लेख गर्दै अध्यक्ष बिजुक्छेँले हामीले गर्ने हरेक गतिविधि समाज र राष्ट्रको योगदानमा टेवा पुग्ने खालको हुनुपर्ने धारणा व्यक्त गरे ।

समाजवाद आउन एक ऐतिहासिक युग लाग्न सक्ने भएकोले अहिलेदेखि नै गतिविधिमार्फत सङ्घर्षलाई निरन्तरता दिनुपर्नेमा जोड दिदैं अध्यक्ष बिजुक्छेँले भने, "हाम्रो गतिविधि र आचरण समाजवादी विचारधारासँग मिल्नु जरूरी छ । समाजवादी विचारधाराले तडकभडकलाई निरूत्साहित र शारीरिक श्रमलाई सम्मान गर्नुका साथै उत्पादनलाई प्राथमिकतामा राख्छ ।"

उनले भने, "व्यक्तिगतभन्दा सामूहिक हितलाई प्राथमिकतामा राख्नुपर्छ । व्यक्तिवादी सोच र प्रवृत्ति त्याग्नु जरूरी छ । नैतिकरूपमा पतन हुनु ठुलो खतरा भएकोले नैतिक मूल्य-मान्यतालाई जोगाउनु जरूरी छ । खराब विचार मनमा आउनु पनि गलत हो । प्राचार्यदेखि कर्मचारीहरूले आर्थिक अनुशासनमा रही काम गरेकै कारण ख्वप कलेजहरूप्रति जनताको विश्वास बढेको हो ।"

संगठनले दिएको जिम्मेवारीलाई इमानदारीपूर्वक पालना गर्नुपर्ने आवश्यकता औंल्याउँदै उनले जिम्मेवारीबाट पन्छिने भगुवाप्रवृत्तिको आलोचना गरे । साथै उनले समाजवादी शिक्षाको लागि ख्वप विश्वविद्यालय स्थापना गर्नु जरूरी रहेको र यो नाफाको लागि नभई परल मूल्यमा गुणस्तरीय शिक्षा दिन ख्वप विश्वविद्यालय स्थापना गर्ने लक्ष्य रहेको बताए । समर्थक र शुभचिन्तकहरूबाट पार्टीलाई प्राप्त सहयोगबाट पार्टीले पुस्तक र पत्रिकाहरू प्रकाशन गरी जनतालाई राजनीतिकरूपमा सचेत पार्ने काम गर्दै आफूले गर्ने हरेक गतिविधिले जनतालाई निरास होइन, ऊर्जा दिइरहेको बताए ।

भक्तपुर नगरपालिकाका प्रमुख एवं कलेज/विद्यालय सञ्चालक समितिका अध्यक्ष सुनिल प्रजापतिले भनपाबाट सञ्चालित कलेजहरू जनताको कलेज भएकोले विद्यार्थीको उज्ज्वल भविष्य र अभिभावकहरूको मन जित्ने गरी शिक्षा दिनु जरूरी रहेको बताए । यसको मूल्याङ्कन आफूले भन्दा अरू पक्षबाट हुने चर्चा गर्दै प्रमुख प्रजापतिले भने, "भक्तपुर नगरपालिकाले देश र जनताको पक्षमा गरेका कामको मूल्याङ्कन अहिले बिस्तारै हुँदै छ ।" कामदारवर्गका जनतालाई शिक्षाबाट वञ्चित गर्ने बदनियतकै कारण ख्वप विश्वविद्यालयको विधेयक पारित नगरेको स्पष्ट पार्दै उनले ख्वप विश्वविद्यालयलाई स्वीकृति दिन सरकारलाई बाध्य पार्ने परिस्थिति बनाउने तर्फ कलेजको गतिविधि केन्द्रित हुनु जरूरी रहेको धारणा व्यक्त गरे ।

जनतालाई अगाडि बढ्न नदिने उद्देश्यका साथ शासक पार्टीहरूले षड्यन्त्रमूलक ढंमा दुईदलीय तानाशाही ल्याउन खोजेको, निर्वाचन आयोगको हालै प्रकाशित विज्ञप्तिमार्फत मतसीमा (थ्रेसहोल्ड) का आधारमा राष्ट्रिय र प्रादेशिक पार्टीको प्रावधान ल्याउन खोज्नु प्रजातन्त्रको भावनाविपरीत छ । जनताले तिरेको करलाई प्राप्त मतको आधारमा राजनीतिक पार्टीलाई अनुदान दिने नीति राजस्व दुरूपयोग हो र अन्ततः यसले दुईदलीय तानाशाही निम्त्याउँछ", प्रमुख प्रजापतिले भने ।

शासक पार्टीहरू सङ्घीयतालाई कार्यान्वयन गर्न नचाहेको स्पष्ट पार्दै उनले सङ्घीयताको मर्मअनुसार स्थानीय तहलाई स्वायत्त बनाउनुपर्ने र विकास निर्माणका कामहरू स्थानीय तहमार्फत गराउनुपर्नेमा जोड दिए । सरकारको गलत शिक्षा नीतिकै कारण ५ सयभन्दा बढी कलेजहरू बन्द हुने स्थितिमा पुगेको उनको धारणा थियो ।

भक्तपुर नगरपालिकाका उपप्रमुख एवं कलेज/विद्यालय सञ्चालक समितिका उपाध्यक्ष रजनी जोशीले महिला अधिकारको लागि नभई समाज परिवर्तनको लागि समाजवादी व्यवस्था स्थापना गर्नु जरूरी रहेको बताइन् । समाजवादी व्यवस्थामा मात्र महिलाको मुक्ति सम्भव भएको प्रसंग जोड्दै सोभियत सङ्घ, प्रजग कोरिया र क्युवाको समाजवादी क्रान्तिले प्रमाणित गरेको उनले बताए ।

ख्वप कलेजका प्राचार्य प्रकाशकुमार श्रेष्ठले जीवनमा आइपर्ने उत्तारचढावमा संयमित भएर अघि बढ्न सकेमात्र सफल हुने धारणा राख्दै भने, "हाम्रो शिक्षण पद्धति युग सुहाउँदो हुने गरी हेरफेर गर्नु आवश्यक छ । सांस्कृतिक विविधताप्रति हामी सचेत हुनु जरूरी छ ।" त्यस्तै ख्वप कलेज अफ लका प्राचार्य अनिता जधारीले अन्तर्राष्ट्रिय श्रमिक महिला दिवसको महत्वबारे स्पष्ट पार्दै महिला दिवसलाई समाजवादी आन्दोलनको रूपमा विकास गर्नु जरूरी रहेको बताए ।

## पूर्व राजा...

संघीय लोकतान्त्रिक गणतन्त्रबारे प्रतिक्रियाबादीले भ्रम फैलाइरहेका र पुरानै ठिक भन्ने भाष्य बनाइरहेका बताउँदै नेकपा माओवादी केन्द्रका प्रवक्ता समेत रहेका सापकोटाले त्यो भ्रम बुद्धिजीवीहरुले तोड्नपर्नेमा जोड दिए । उनले देशको अस्तित्व रहन नदिने योजनाले माओवादी केन्द्रमाथि र वर्तमान व्यवस्था माथि हमला गर्न खोजिएको तर्फ नेपाली जनता सचेत रहनुपर्ने बताए । माओवादी पार्टी नभई आन्दोलन भएको भन्दै उनले देश र जनताका बिरुद्ध हुने सबैखाले षडयन्त्र विफल बनाउदै परिवर्तन तथा देश र जनताको रक्षा गर्ने दावी गरे । "समाजबाद नै जनताको वास्तविक शासनब्यवस्था हो, जहाँ सबैको समानता र न्याय सम्भव छ ।" उनले भने, "हाम्रो लक्ष्य यथास्थितिमा रहने होइन, समाजवादमा पुग्ने हो ।"

सो अवसरमा नेकपा (माओवादी केन्द्र)का केन्द्रीय सदस्यहरु दिलिप प्रजापति, देवेन्द्र श्रेष्ठ, डिपी ढकाल, प्रतिमा श्रेष्ठ र नेपाल बुद्धिजीवी संगठनका केन्द्रीय अध्यक्ष कृष्ण केसी लगायतले वर्तमान ब्यवस्थामा बुद्धिजीवीको भूमिका विषयक प्रशिक्षण दिएका थिए । कार्यक्रममा मध्यपुर थिमिका उपप्रमुख बिजय कृष्ण श्रेष्ठ लगायतको आतिथ्यता रहेको थियो ।

सो अधिवेशनको बन्द सत्रले डा श्याम शरण श्रेष्ठको अध्यक्षतामा ५१ सदस्यीय भक्तपुर जिल्ला कार्यसमिति निर्वाचित गरेको माओवादी केन्द्रका जिल्ला संयोजक सुनिल बासुले जानकारी दिए । कार्यक्रमको सहजीकरण डा. रामहरि श्रेष्ठले गरेको थियो ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# निफमा शाम्बालाले जित्यो उत्कृष्ट अवार्ड

काठमाडौं । नेपाल चलचित्र तथा सांस्कृतिक प्रतिष्ठानद्वारा आयोजित आठौँ नेपाल अन्तर्राष्ट्रिय चलचित्र महोत्सव (निफ) मा चलचित्र 'शाम्बाला' उत्कृष्ट घोषित भएको छ । मीन बहादुर भामद्वारा निर्देशित चलचित्र 'शाम्बाला'ले गौतम बुद्ध अवार्ड जितेको छ । शाम्बालाले डोल्पाका जनजीवन र बहुपति विवाहपछि आएको परिवर्तन र हिमाली यात्राको कथा भन्छ ।

सो महोन्सवमा उत्कृष्ट राष्ट्रिय फिचर फिल्म अवार्ड भने चलचित्र'आखाँ'ले हात पारेको छ । यस चलचित्रले सहरभित्रको मध्यम बर्गको कथालाई समेटेको छ। जातीय छुवाछुतलाई विषय बनाइएको चलिचत्र 'पुजार सार्की'बाट निर्देशक दिनेश राउत उत्कृष्ट घोषित भएका छन् । 'पुजार सार्कीमा अभिनय गरेकी अभिनेत्री अञ्जना बराइलीले उत्कृष्ट अभिनेत्रीको अवार्ड जितिन् भने उत्कृष्ट अभिनेतातर्फ 'आखाँ'बाट आर्के मेहताले हात पारे ।

राष्ट्रिय फिचर फिल्म छायांकन तर्फको अवार्ड छायांकार राजेश श्रेष्ठले जितेका छन् । त्यस्तै उत्कृष्ट राष्ट्रिय चलचित्र लेखन अवार्ड आँखा बाट जौन योञ्जनले पाएका छन् । भारतीय चलचित्र 'रूक्मिणी'ले डङ्की आट्य अवार्ड र मञ्जुश्री अवार्ड (एआई फिल्म अवार्ड) अर्जेन्टिनाको चलचित्र 'द अविस्' ले पाएको छ । उत्कृष्ट सर्ट फिल्म निर्देशक अवार्ड निशान खत्रीको चलचित्र 'अ बिटनेस' ले पाएको छ भने, 'माउन्ट एभरेस्ट अवार्ड' बेल्जियमको 'मेल्टिङ स्नो' ले पाएको छ । यस वर्ष 'बागमती अवार्ड' स्पेनको चलचित्र 'लुसिया जि रोमेरो' ले पाएको छ ।

चलचित्र सतिदेवीले पब्लिक च्वाइस उत्कृष्ट फिचर फिल्म अवार्ड पाएको छ । उत्कृष्ट राष्ट्रिय डकुमेन्ट्री फिल्म अवार्ड सुविना श्रेष्ठको 'देवि,' अडियन्स चोइस अवार्ड डकुमेन्ट्री तर्फ चलचित्र 'गर्ल्स रि राइटिङ डेस्टिनि,' उत्कृष्ट सर्ट चलचित्र अवार्ड र राष्ट्रिय सर्ट फिल्म अवार्ड निराजन राज भेटवालको चलचित्र 'द विटनेस ट्रि' ले पाएको छ । महोत्सवमा ४० देशका ८७ फिल्म प्रदर्शन भएका थिए ।

# विश्वब्यापी रुपमा फिल्मी क्षेत्रको व्यापार आरालो तर्फ

काठमाडौं । नेपालमा मात्र होइन विश्वब्यापी रुपमा चलचित्रको व्यापारमा मन्दी देखिएको छ । बलिउडमा साउथ मुभि 'पुष्पा २' र 'छावा'बाहेक अरु फिल्मले बम्पर कमाइ गर्न सकेनन् । नेपालमा पनि 'पूर्णबहादुरको सारंगी'पछि 'अञ्जिला' र 'होस्टेल ३'को कमाइ मात्र सुखद रहेको देखियो ।

हलिउडको हाल पनि अहिले यस्तै छ। नयाँ रिपोर्टअनुसार, कोरोना महामारीपछि हलिउडको कमाईमा देखिएको ठूलो गिरावटको क्षतिपूर्ति अहिले पनि हुन सकेको छैन । सन् २०२५ को पहिलो त्रैमासिक पनि सुस्त छ । टम क्रुजको आगामी फिल्म 'मिसन इम्पोसिबल : फाइनल रेकोनिङ', 'सुपरम्यान' र 'अवतार : फायर एन्ड एस'जस्ता फिल्मबाट थप हलिउडलाई राहत मिल्ने आशा छ ।

रोयटर्सको रिपोर्टअनुसार गतवर्ष अमेरिका र क्यानडामा कुल बक्स अफिस कमाई ८.६ बिलियन डलर थियो । जबकि सोही आम्दानी सन् २०१९ मा महामारीअघिको ११.४ बिलियन डलरभन्दा लगभग २५% ले कम हो ।

अभिनेता, लेखकको हडतालले वर्ष २०२३ मा घाटा

सन् २०२३ मा कोरोना महामारीपछि हलिउडलाई ठूलो झट्का लागेको थियो । फिल्म उद्योगका लेखक तथा कलाकारले हडताल गरेका थिए । जसका कारण निर्माण भइरहेका फिल्मको बजेटमा वृद्धि भएको छ ।

किनभने फिल्मको छायांकन बीचमै रोकिएको थियो । हडतालका कारण सुटिङका लागि निर्माण गरिएका सेट लामो समयसम्म निष्क्रिय रहेको र भाडा तिर्नुपर्ने बाध्यता थियो ।

उद्योगका दिग्गज अप्रिलमा लास भेगासमा भेला हुनेछन्

हलिउडमा फिल्म व्यवसायका ठूला नामहरू अर्को महिनाको सुरुमा लस भेगासमा हुने 'सिनेमा-कन समिट'मा भेला हुनेछन् । यो समारोहमा उद्योगको अवस्थाबारे छलफल हुने बुझिएको छ । यस सम्मेलनमा हलिउड स्टुडियो र मल्टिप्लेक्स मालिकहरूको भेला हुनेछ । यसमा एएमसी इन्टरटेनमेन्ट, सिनेमार्क र सिनेवर्ल्डका साथै साना सहरका एकल-स्क्रिन थिएटरका मालिक र कार्यकारी समावेश हुनेछन् ।

'अनोरा'का निर्देशकले भनेका थिए- अन्त्य यसरी हुनेछ

यस महिनाको अस्कर अवार्ड समारोहमा 'अनोरा'ले उत्कृष्ट फिल्मसहित ५ अवार्ड जितेपछि उत्कृष्ट निर्देशक घोषित सिन बेकरले फिल्म निर्माता, वितरक र दर्शकलाई थिएटरमा सहयोग गर्न अपिल गरेका थिए । उनले भने, 'थिएटर जाने अनुभव अहिले संकटमा परेको छ । महामारीको समयमा थिएटर स्क्रिनको संख्या घटेको छ । यदि हामीले यो प्रवृत्तिलाई परिवर्तन गरेनौं भने, हामीले हाम्रो संस्कृतिको महत्वपूर्ण भाग गुमाउनेछौं ।'

दर्शक ओटीटी रिलिजको लागि पर्खिरहेका छन्

विज्ञलाई उध्दृत गर्दै प्रतिवेदनमा दर्शकले अझै पनि ठूला बजेटका फिल्म हेरे पनि अहिले घरमै बसेर हेर्न पर्खिरहेका र त्यसमा खुसी रहेको बताएको छ । फिल्म ३ देखि ८ हप्ताभित्र ओटीटीमा आउने कुरा सामान्य भैसक्यो । जबकि पहिले कम्तिमा ३ महिना लाग्थ्यो ।

हलिउडले यो वर्ष आउने महिनामा केही ठूला फिल्मबाट कमाइको अपेक्षा गरेको छ । यसमा 'मिसन इम्पोसिबल : द फाइनल रेकनिङ' समावेश छ, जुन लामो समयदेखि चलिरहेको एक्सन फ्रेन्चाइजीमा क्रुजको अन्तिम फिल्म हुन सक्छ । यो फिल्म मे २३ मा रिलिज हुँदैछ । जुन २७ मा रिलिज हुने ब्राड पिटको 'एफ वन'बाट पनि धेरै अपेक्षा छन् । यो फिल्ममा ब्राड पिटले फर्मुला वन चालकको भूमिका निर्वाह गरेका छन् । ११ जुलाईमा वार्नर ब्रदर्सले आफ्नो नयाँ 'सुपरम्यान' फिल्म रिलिज गर्नेछ, जसलाई 'गार्डियन्स अफ द ग्यालेक्सी' निर्माता जेम्स गनले निर्देशन गरिरहेका छन् । फिल्ममा डेभिड कोरेनस्वेट मुख्य भूमिकामा छन् ।

मार्वल सिनेम्याटिक युनिभर्सको एन्टीहिरो फिल्म 'थन्डरबोल्ट्स' पनि मे २ मा रिलिज हुनेछ र ग्रीष्मकालीन फिल्म सिजनको सुरुवात गर्नेछ । त्यसपछि 'द फ्यान्टास्टिक फोर : फस्ट् स्टेप्स' जुलाईको अन्त्यमा २५ तारिखमा रिलिज हुनेछ ।

वर्षको अन्त्य नोभेम्बर र डिसेम्बरमा बिदा र चाडपर्वको बीचमा दोस्रो म्युजिकल बक्स अफिस फिल्म 'विक्ड : पार्ट २' नोभेम्बर २१ मा रिलिज हुँदैछ । एनिमेसन फिल्म 'जुटोपिया २' पनि नोभेम्बर २६ मा रिलिज हुँदैछ । जेम्स क्यामरुनको 'अवतार' फ्रेन्चाइजको तेस्रो फिल्म 'अवतार : फायर एन्ड एस' वर्षको

# ओस्कर विजेता प्यालेष्टिनी निर्देशक इजरायली सेनाको नियन्त्रणमा

एजेन्सी । ओस्कर विजेता प्यालेस्टिनी फिल्म निर्देशक हमदान बल्लालाई इजरायली सेनाले नियन्त्रणमा लिएको छ । उनका सह-निर्देशक युवल अब्राहमले माइक्रो ब्लगिङ वेबसाइट एक्समा यो कुराको जानकारी गराएका हुन् । केही इजरायलीहरूले वेस्ट बैंकमा रहेको उनको घर नजिकै निर्ममतापूर्वक कुटपिट गरेको अनि उनको टाउको र पेटमा गम्भीर चोट लागेको युवलले आफ्नो पोस्टमा उल्लेख गरेका छन् ।

घटनापछि हमदानले एम्बुलेन्स बोलाउँदा इजरायली सैनिकहरूले एम्बुलेन्स रोकेर हमदानलाई नियन्त्रणमा लिएर गएको बताइएको छ । त्यसपछि हमदानको अत्तोपत्तो नभएको उनले बताएका छन् । हमदान र युवलले मिलेर 'नो अदर ल्याण्ड' फिल्म बनाएका थिए । यो फिल्मले यस वर्ष ओस्करमा सर्वश्रेष्ठ वृत्तचित्र पुरस्कार पाएको थियो । फिल्मले युद्धको समयमा प्यालेस्टिनी कार्यकर्ता बासेल आद्रा र युवल बीच विकसित भएको मित्रता र संघर्षलाई देखाएको थियो । फिल्मले २०२४ मा बर्लिन अन्तर्राष्ट्रिय फिल्म महोत्सवमा पनि अवार्ड पाएको थियो । हमदानलाई इजरायली बस्तीको प्रहरी चौकीमा राखिएको बताइएको छ । कसैलाई पनि उनीसँग भेट्न वा कुरा गर्न अनुमति नभएको पनि बताइएको ।

# अनलाइन जुवा प्रचारको आरोपमा २५ सेलिब्रेटीविरुद्ध मुद्दा

एजेन्सी । भारतको तेलंगाना प्रहरीमा राणा दग्गुबाती, प्रकाश राज, विजय देवराकोंडा, मन्चु लक्ष्मी, प्रनिता, नीधि अग्रवाललगायत २५ तलिउड सेलिब्रेटी र इन्फ्लुएन्सरविरुद्ध अवैध सट्टेबाजी एप्सको प्रचार गरेको आरोपमा एफआईआर दर्ता भएको भारतीय संचार माध्यमले जनाएको छ ।

न्यूज एजेन्सी एनएनआईका अनुसार ३२ वर्षीय फणीन्द्र शर्मा नामक व्यापारीले हैदराबादको मियापुर प्रहरी चौकीमा रिपोर्ट दर्ता गरेका हुन् । अनन्या, श्रीमुखी, सिरी हनुमन्थु, श्यामला, वर्षिनी, शोभा, नेहा, पाण्डु, पद्मावती, इमरान खान, विष्णु प्रिया, हर्षा साई, सन्नी यादव, टेस्टी तेजा र रितु नामक इन्फ्लुएन्सरलाई समेत मुद्दा दायर गरिएको जनाइएको छ ।

अभिनेता र सामाजिक सञ्जाल इन्फ्लुएन्सरले जानाजानी बेटिंग एपहरूको प्रचार गरिरहेको र समाजका युवाहरूलाई भ्रष्ट तुल्याएको आरोप छ । यसले गर्दा धेरै मानिस आर्थिक समस्यामा परिरहेको गुनासो समेत उल्लेख छ । उजुरीकर्ताका अनुसार, यी बेटिंग एप प्लेटफर्मले जुवा कानून र नियमहरू, विशेष गरी १८६७ को सार्वजनिक जुवा ऐनको प्रत्यक्षरुपमा उल्लंघन गरेको भनिएको छ । 'यो लतले गर्दा छोटो अवधिमा जोखिमपूर्ण रुपमा पैसा कमाउने व्यवहारलाई प्रोत्साहन गरेर व्यक्ति र समाजलाई हानि पुर्‍याएको छ, जसले गर्दा आर्थिक संकट निम्त्याउँछ' उजुरीमा भनिएको छ । -एएनआई

# साउथ मुभि 'एल २ : एम्पुरन' बिहीबारदेखि नेपालमा

काठमाडौं । साउथका मलयालम सुपरस्टार मोहनलाल र निर्देशक पृथ्वीराज सुकुमारनको बहुप्रतीक्षित फिल्म 'एल २ : एम्पुरन' बिहीबार नेपालमा पनि रिलिज हुने भएको छ। वितरण कम्पनी ब्यांकटेस इन्टरटेनमेन्टले एक विज्ञप्ति जारी गर्दै प्रदर्शन हुने जनाएको छ । यो फिल्म सन् २०१९ को ब्लकबस्टर फिल्म 'लुसिफर'को दोस्रो श्रृंखला हो ।

मोहनलालको पछिल्लो सामाजिक संजाल पोस्टअनुसार फिल्मले एड्भान्स टिकट बिक्रीबाट मात्रै विश्वब्यापी ५८ करोड भारु कमाएको छ । ट्रेड विश्लेषकले यो फिल्म सबैभन्दा छिटो १०० करोड कमाउने पहिलो मलयालम फिल्म हुनसक्ने अनुमान गरेका छन् ।

यो फिल्मलाई सन् २०२५ कै ठूलो मलयालम फिल्मको रुपमा विश्लेषकले बताइरहेका छन् । व्यापार विश्लेषक रमेश बालाले एम्पुरानको बलियो चर्चालाई स्वीकार गर्दै भने, 'केरलामा, फिल्म पहिले नै शीर्ष स्थानमा छ र यसको सुरुवाती दिनमा १५ करोड भारु हुने अपेक्षा छ । पहिलो दिन एम्पुरानको विश्वव्यापी कलेक्सन लगभग ४०-५० करोड रुपैयाँ हुनेछ । यो मलयालम फिल्मको लागि अहिलेसम्मकै सबैभन्दा ठूलो संख्या हो ।'

मोहनलाल आफ्नो करियरको कठिन मोडबाट गुज्रिरहेका छन् किनकि उनका पछिल्ला केही फिल्म विशेष गरी 'मलैकोट्टई वालिबन' र उनको निर्देशन डेब्यू फिल्म 'बरोज'ले बक्सअफिसमा राम्रो प्रदर्शन गर्न सकेनन् । केरला र अन्य राज्यहरूमा (मलयालम संस्करण) एम्पुरनको अग्रिम बुकिङ असाधारण छ ।

विश्लेषक पिल्लईले फिल्म अन्य देशमा अग्रिम टिकट बिक्री राम्रोसँग अगाडि बढिरहेको बताए । 'आयरल्याण्डमा थोरै मलायाली जनसंख्या छ र त्यहाँ पनि फिल्म राम्रोसँग अगाडि बढिरहेको छ । अमेरिकामा यो पहिले नै ४१ मिलियन नाघेको छ र बढ्दै गइरहेको छ' उनले भने । 'एल टु : एम्पुरन' एक्सन थ्रिलर हो जुन 'लुसिफर'को सिक्वेल हो, जसबाट पृथ्वीराज सुकुमारनले निर्देशन डेब्यु गरेका थिए । फिल्ममा मोहनलालबाहेक पृथ्वीराज सुकुमारन, मञ्जु वारियर, टोभिनो थोमस, इन्द्रजित सुकुमारन, अभिमन्यु सिंह, जेरोम फ्लिन र सुरज भेन्जारामुडु मुख्य भूमिकामा छन् ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY




वर्ष १८ | अङ्क ३१ | ने.सं. ११४५ चौलाथ्व पञ्चमी | चैत्र २० गते बुधबार, २०८१ | 02 Apr. 2025, Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

## संसद्को हिउँदे अधिवेशन विवादै विवादका बीच सम्पन्न !



काठमाडौं । राष्ट्रपति रामचन्द्र पौडेलले संघीय संसद्का दुवै सदनको हिउँदे अधिवेशन अन्त्य गरेका छन् । मन्त्रिपरिषद्को सिफारिसअनुसार मंगलबारबाट दुवै सदनको अधिवेशन अन्त्य गरेका हुन् । सोमबार मन्त्रिपरिषद् बैठकले अधिवेशन अन्त्यका लागि राष्ट्रपति पौडेलसमक्ष सिफरिस गरेको थियो ।

यसअघि माघ ७ मा मन्त्रिपरिषद् बैठकले गरेको सिफारिसका आधारमा राष्ट्रपति पौडेलले माघ १८ गते शुक्रबार दिउँसो १ बजे नयाँ बानेश्वर स्थित संघीय संसद् भवनमा बस्ने गरी दुवै सदनको अधिवेशन आह्वान गरेका थिए । बर्खे अधिवेशन अन्त्य भएको ४ महिना ७ औं दिनमा बसेको मन्त्रिपरिषद् बैठकबाट सरकारले हिउँदे अधिवेशन आह्वानका लागि राष्ट्रपतिसमक्ष सिफारिस गर्ने निर्णय गरेको थियो । राष्ट्रपति पौडेलले सरकारको सिफरिसमा अघिल्लो अधिवेशन अन्त्य भएको ४ महिना १८ औं दिनबाट सुरु हुने गरी संसद् अधिवेशन आह्वान गरेका थिए ।

दुई संसद् अधिवेशनबीचको अन्तर ६ महिनाभन्दा बढी हुन नहुने संवैधानिक व्यवस्था छ । संसद्को अघिल्लो अधिवेशन (बर्खे) गत भदौ ३१ गते राति १२ बजेदेखि अन्त्य भएको थियो ।

सरकारले संसद् अधिवेशन छलेर अध्यादेशमार्फत् शासन-सत्ता चलाउन खोजेको भन्दै चौतर्फी आलोचना भएपछि सरकारले माघ ७ गते मन्त्रिपरिषद् बैठकबाट अधिवेशन आह्वानका लागि राष्ट्रपति पौडेलसमक्ष सिफारिस गर्ने निर्णय गरेको थियो । गत भदौ ३१ गते मध्यरातिबाट अधिवेशन अन्त्य भएपछि प्रतिनिधिसभाको पहिलो दल नेपाली कांग्रेससँगको सत्ता साझेदारी गरिरहेको नेकपा एमाले नेतृत्वको सरकारले दुईपल्ट राष्ट्रपति पौडेलसमक्ष अध्यादेश सिफारिस गरिसकेको थियो ।

मन्त्रिपरिषद् बैठकबाट गत पुस ९ मा 'सहकारीसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१' सिफारिस गरेको सरकारले गत पुस २६ गते राति फेरि ५ वटा अध्यादेश शीतलनिवास पठाएको थियो । पुस ९ मा सरकारले गरेको सिफारिसअनुसार राष्ट्रपति पौडेलले पुस १४ गते 'सहकारीसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१' जारी गरेका थिए ।

पुस २६ गते सरकारले 'सुशासन प्रवर्धन तथा सार्वजनिक सेवा प्रवाहसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१', 'आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व (पहिलो संशोधन) अध्यादेश, २०८१', 'निजीकरण (पहिलो संशोधन) अध्यादेश, २०८१', 'आर्थिक तथा व्यावसायिक वातावरण सुधार र लगानी अभिवृद्धिसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१' र 'भूमिसम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने अध्यादेश, २०८१' राष्ट्रपतिसमक्ष सिफारिस गरेको थियो ।

राष्ट्रपति पौडेलले सरकारबाट सिफारिस भइआएका ५ मध्ये ४ अध्यादेश पुस २९ गते जारी गरे । 'भूमिसम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने अध्यादेश, २०८१'लाई दुई दिन अध्ययन गरेपछि माघ २ गतेमात्रै जारी गरे ।

राष्ट्रपति पौडेलद्वारा जारी छवटै अध्यादेश सरकारले प्रतिनिधिसभाको माघ १८ गतेको बैठकमा पेस गरेको थियो । जसमध्ये 'सुशासन प्रवर्द्धन तथा सार्वजनिक सेवा प्रवाहसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१', 'आर्थिक तथा व्यावसायिक वातावरण सुधार र लगानी अभिवृद्धिसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१', 'निजीकरण

बाँकी पेज ७ मा

## विश्व नेवाः दिवसको अवसरमा सांस्कृतिक अभियन्ताहरु सम्मानित



काठमाडौं । आठौं विश्व नेवाः दिवस (हलिं नेवाः दिं)को अवसरमा नेवाः गुथि न्यूयोर्कद्वारा आयोजित सम्पदा संरक्षण महाअभियानसंग मिलेर पाटन दरबार क्षेत्रस्थित पाटन संग्रहालयमा एक समारोहका बीच बुंगद्यो अर्थात् रातो मच्छिन्द्रनाथ रथयात्रासंग सम्बन्धित गुथियारलगायतका व्यक्तित्वहरुलाई कदर स्वरुप सम्मान गरिएको छ । त्यसका साथै कला, संस्कृति र भाषा संरक्षण कार्यमा निरन्तरत रुपमा क्रियाशील सञ्चारकर्मी, कानुनी व्यवसायी र सांस्कृतिक अभियन्ताहरुलाई सम्मान गरिएको थियो ।

सो समारोहमा सम्मानित हुनेहरुलाई काठमाडौं महानगरपालिका उपमेयर सुनीता डंगोल र ललितपुर महानगरपालिकाका मेयर चिरिबाबु महर्जनले

बाँकी पेज ७ मा

## रजकको हत्या तथा संचार माध्यम माथिको प्रहारको विरोधमा पत्रकार संगठनहरु एक ठाउँमा !




भक्तपुर । गत चैत्र १५ गते राजावादी समूहको हिंसात्मक आन्दोलनमा कार्य क्षेत्रमा खटिएका पत्रकार सुरेश रजकले ज्यान गुमाएका थिए भने आन्दोलनस्थल वरिपरि रहेका संचार माध्यमका कार्यकक्षमा तोडफोड आगजनीसमेत गरेको घटनालाई लिएर भक्तपुरका सबै पत्रकार संगठनहरु एक ठाउँमा उभिएका छन् । नेपाल पत्रकार महासंघ भक्तपुरले विभिन्न पत्रकार संघ संगठनसँग गरेको अन्तर्क्रिया कार्यक्रममा भक्तपुरका विभिन्न पत्रकार

बाँकी पेज ७ मा

## नगरपालिकाको २९ औं स्थापना दिवसमा कर्मचारी, करदाता र ज्येष्ठ नागरिकसम्म सम्मानित



भक्तपुर । मध्यपुर थिमि नगरपालिकाको २९ औं स्थापना दिवस सम्पन्न गरेको छ । बि.सं. २०५३ सालमा तत्कालिन ५ वटा गाउँपालिका समेटेर गठन भएको नगरपालिकाले बिहिवार नगरपालिकाका कर्मचारी, करदाता, उपभोक्ता समिति, ज्येष्ठ नागरिक र सेवा निवृत्त कर्मचारीहरुलाई सम्मान गरेको छ । साथै विभिन्न विधामा उत्कृष्टता हासिल गर्ने नगरबासीहरुलाई पनि सम्मान गरेको छ ।

यसवर्ष मध्यपुर थिमि नगरपालिकाले उत्कृष्ट कर्मचारीको रुपमा आर्थिक विकास महाशाखा प्रमुख तुलसी भक्त तकोलाई सम्मान गरेको हो । तको जागिरे जीवनको २४ वर्षमा तेस्रो पटक उत्कृष्ट कर्मचारी घोषित भएको हो । उनी पहिलो पटक २०६१ मा, दोस्रो पटक २०७७ मा उत्कृष्ट कर्मचारी घोषित भएको थियो ।

उनले यसवर्ष मौलिक स्थान नाम प्रतिस्थापन गर्ने, मध्यपुर महोत्सवलाई सफल बनाउन, नगरपालिकाको आन्तरिक राजश्व बृद्धिलगायतका कार्यमा गरेको योगदानको कदर गर्दै उत्कृष्ट कर्मचारीको रुपमा सम्मान गरिएको नगरपालिकाले जनाएको छ ।

नगरपालिकाले उत्कृष्ट करदाताको रुपमा जगदिश किराना पसल, उत्कृष्ट उपभोक्ता समितिको रुपमा शंखधर पार्क गुरु योजना निर्माण उपभोक्ता समितिलाई सम्मान गरेको हो । यस्तै सामुदायिक विद्यालयतर्फ आदर्श मा.वि (सानोथिमि), संस्थागत विद्यालयतर्फ मातृभुमी स्कुल, जिब्रो छेड्ने जात्रामा जिब्रो छेड्ने व्यक्तिहरु विरेन्द्रभक्त गजु श्रेष्ठ र सुजन बाग श्रेष्ठ, सगरमाथा आधार शिविर पुग्न सफल नगदेशका दुई जुमल्याहा दाजुभाई त्रिनेश कवाडी र त्रिजल कवाडी, नेवा आइडल सिजन २ गायन प्रतियोगिताका विजेता आश्रेय रन्जितलाई पनि सम्मान गरिएको थियो ।

यसैगरी प्रत्येक वडाबाट एक महिला र एक पुरुष गरी दुई/दुई जना सबैभन्दा बढी उमेरका ज्येष्ठ नागरिकहरु र सेवा निर्बित्त कर्मचारीहरु रामे खत्री, गंगा थापा, पुर्ण ज्योती शाक्य, कुमार पौडेल तथा हिरा काजीलाई पनि सम्मान गरिएको थियो ।

कार्यक्रमको उद्घाटन

बाँकी पेज ७ मा

## समाजवादी मोर्चाको शालीन विरोध प्रदर्शन छायाँमा !




काठमाडौं । गत शुक्रबार एकातिर राजावादीहरुको राजतन्त्र फर्काउने भन्दै हिंसात्मक आन्दोलन गरि रहेका थिए भने अर्को तर्फ नेकपा माओवादी केन्द्रसहितका गणतन्त्र पक्षधर चार दलले भृकुटीमण्डपमा करिब ३५ हजारको सहभागितामा जनसभा गरे । गृहमन्त्रालयको रिपोर्टमै उक्त जनसभामा करिब ३५ हजार सहभागी भएको उल्लेख थियो । जनसभामा प्रमुख प्रतिपक्षी माओवादी केन्द्र, नेकपा एकीकृत समाजवादी, नेपाल समाजवादी पार्टी र नेत्रविक्रम चन्द्र 'विप्लव' नेतृत्वको नेपाल कम्युनिस्ट पार्टीले संयुक्त रुपमा आयोजना गरेका थिए । जसमा चार शीर्ष नेताले सम्बोधन गरे ।

कार्यक्रममा नेकपा माओवादी केन्द्रका अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड', एकीकृत समाजवादीका अध्यक्ष माधव नेपाल, नेसपा अध्यक्ष महेन्द्रराय यादव र नेकपा महासचिव विप्लवले गणतन्त्र रक्षाका लागि एकजुट हुने वाचा गरे । माओवादी केन्द्रका महासचिव देव गुरुङले सभामा ७० हजार मानिसको उपस्थिति रहेको दाबी गरे ।

मोर्चाले काठमाडौंका ८ रुटबाट ऱ्याली निकालेको थियो । सुनधाराबाट ऱ्याली निकालेको विप्लव नेतृत्वको नेकपा पनि संयमित थियो । न्यूरोड गेटबाट निस्किएका नेसपाका नेता पनि संयमित थिए । भृकुटीमण्डको सभामा मिसिए । यस्तै, शान्ति वाटिका र मैतीदेवीबाट निस्किएका एकीकृत समाजवादीका नेता-कार्यकर्ता पनि भृकुटीमण्डपमा मिसिए । चार दलको सभामा पनि कुनै उत्तेजक गतिविधि नभएको गृह मन्त्रालयले जनाएको छ ।

एकजना प्रहरी अधिकृतका अनुसार समाजवादी मोर्चाको सभामा आएका कुनै व्यक्ति

बाँकी पेज ५ मा

# आदिवासीको अधिकार सुनिश्चितताका लागि शेर्पालुङ

काठमाडौं । शेर्पालुङ स्थापना गर्नु नै हिमाली आदिवासीको पहिचान सहितको अधिकार सुनिश्चित हुनेमा सरोकारवालाले जोड दिएका छन् । शनिबार सोलुखुम्बु जिल्लाको सोलुदुधुण्ड नगरपालिका सल्लेरीमा आयोजित शेर्पा समुदायसंग सम्बन्धित विविध विषयमाथिको अन्तरक्रिया कार्यक्रममा बोल्ने बक्ताहरुले शेर्पा लगायत हिमाली आदिवासीलाई समेट्ने भनेको शेर्पालुङ प्रदेश भएको भनाई राखे ।

नेपाल शेर्पा संघका महासचिव लाक्पा शेर्पाले शेर्पालुङसभाको अवधारणाको विषयमा प्रस्तुती राख्दै शेर्पालुङलेमात्र शेर्पालगायत हिमाली क्षेत्रमा बसोबास सानो संख्यामा रहेका आदिवासीको राजनीतिक अधिकार सहितको पहिचान प्राप्त हुने बताए । उनले पछिल्लो समय संघियतालाई हटाउने किसिमका कुराहरु सिमित समूहले उठाउने काम भईरहेको बताउदै संविधानले सुनिश्चित गरेको आदिवासी जनजातिको अधिकार संरक्षणको निमित्त एकजुट हुन आग्रह गरे । उनले शेर्पालुङसभाको अवधारणाको विषयमा प्रष्ट पार्दै नेपाल शेर्पा संघले आफ्नो सातौं महाधिवेशनले शेर्पालुङसभाको घोषणा गर्ने समेत बताए । महासचिव शेर्पाले भने 'शेर्पालुङलेमात्र शेर्पाको भाषा, धर्म, संस्कृति, भुमिभुभाग, मुर्तअर्मुत सम्पदा र पुर्ण राजनीतिक अधिकार सहितको पहिचान पाउँछ ।'

महासचिवको भनाई जस्तै संघका अध्यक्ष गेल्जे शेर्पाले पनि संघियताको राम्रो पक्ष भनेको आदिवासी जनजातिको अधिकार स्थापित गर्नु रहेको बताए । अध्यक्ष शेर्पा संघियताको अभ्यास राम्रो ढंगले नभएको बताउँदै संविधानले सुनिश्चित गरे अनुसार संघियतामा चल्न सके राजनीतिक अधिकारबाट बँचित समुदायको विषय उठान हुने भनाई राखे । उनले आदिवासी जनजाति र पहिचानको आन्दोलनका विषयलाई उठान गर्दै विकासको नाममा राज्यले आदिवासी




भूमिलाई नष्ट गर्दै गएको आरोप लगाउदै जथाभावि आदिवासी जनजातिको अनुमती बिना हाईड्रोपावरहरु संचालन गर्दा उनीहरुको ज्ञानसिपहरुमा असर परेको बताए । उनले माथि जोड्दै विकास निमार्णको कामगर्दा आदिवासीसंग स्वतन्त्र पुर्व जानकारी सहितको मन्जुरी एफपिक गनुपर्ने बताए ।

नेपाल शेर्पा संघका पूर्व महासचिव निमा तुण्डुप शेर्पाले भने 'राज्यले हाम्रो भाषा, संस्कृतिमाथि विभेद गरिरहेको छ, धार्मिक प्रयोगका खादा, चाडपर्व लोसारमा हरेक क्षेत्रबाट राज्यले बारम्बार प्रहार गर्दै आएको यि विभेद अन्त्यको विकल्प भनेको शेर्पालुङमात्र हो ।' उनले वर्तमान राज्य संरचनाले शेर्पालुङलाई दुईभागमा बाढेको बताउदै यसलाई एक बनाएर शेर्पालुङ बनाउन सकिने र अर्को भनेको संविधान अनुसार दुई प्रदेशमा भएको शेर्पा क्षेत्रलाई शेर्पा विशेष स्वायता क्षेत्र घोषणा गर्न तर्फ पहल गर्नुपर्ने भनाई राखे ।

अन्तरक्रिया कार्यक्रममा आर्चाय नुर्बु शेर्पाले शेर्पा समुदायको धर्म संस्कृति र भाषाका सम्बन्धमा प्रस्तुती राखेको थियो । उनले शेर्पा समुदाय बौद्धधर्मसंगको सम्बन्ध र बौद्धधर्म अनुसारका पुजापाठका सम्बन्धमा प्रष्ठ पार्नु भएको थियो । उने शेर्पाले मनाउने गरेको लोसार, भाषा, लिपिको प्रयोग र शेर्पाहरुको थरका विषयमा जानकारी दिएको थियो ।

यसैगरि पर्यटन व्यवसायी आङछिरिङ शेर्पाले जलवायु परिवर्तन र हिमाली क्षेत्रको फोहोर व्यवस्थापनको दिर्घकालीन योजना विषयमा कार्यपत्र प्रस्तुत गरेको थियो । कार्यपत्र प्रस्तुत गर्दै उनले हिमाली क्षेत्रमा जलवायु परिवर्तनका कारण जिविकोर्पाजनमा चुनौती बढ्दै गएको बताए । जलवायु परिवर्तनले निमत्याएको बाढिपहिरो लगायतले पर्यटन व्यवसाय धरापमा पर्ने अवस्थामा रहेको भनाई राखे । उनले हिमालमा हिउँ नरहनु, पानीको मुहान सुक्नु, बेमौसमीका कारण खेतीकिसानीमा प्रभाव पर्दा अधिकाँश युवापुस्ताहरु विस्तारै पलयान हुँदै विदेशिन बाध्य रहेको जोडे । उनले पर्यटन क्षेत्रमा आश्रित शेर्पाहरुको पेशा विस्तारै धराप हुनेमा चिन्ता व्यक्त गरे ।

यसअघि सोलुदुधकुण्ड नगरपालिकाका प्रमुख नाम्गेल जाङ्बु शेर्पाले स्वागत मन्तव्य राख्दै द्वन्दकालपछि सोलुखुम्बुमा शेर्पाको जनसंख्या घट्दो अवस्थामा रहेको बताए । उनले शेर्पाहरुले पुर्ख्यौली थाकथलोलाई बेच्दै काठमाडौं हुँदै युरोप अमेरिका तिर जाने लहर चलेकोले यस्तै अवस्था रहिरहने हो भने सोलुखुम्बुबाट शेर्पाको पहिचान हराउँदै जानेमा चिन्ता व्यक्त गरे । उनले भने दुख लाग्छ पुर्खाको सम्पतीलाई नबेच्न भन्छु शेर्पाको पहिचान नरहने हो की भन्ने डर छ । तर नगरपालिकाले भने शेर्पाको भाषा, संस्कार संस्कृति संरक्षणमा भने नगर अगि बढ्को बताए ।

नेपाल शेर्पा संघका अध्यक्ष गेल्जे लामा शेर्पाको अध्यक्षतामा भएको कार्यक्रममा संविधान सभा सदस्य आङ दावा शेर्पा, कोशी प्रदेशसभा सदस्य गोम्बु शेर्पा, नेपाल आदिवासी जनजाति महिला महासंघका अध्यक्ष डिमी शेर्पा, हिमालयन शेर्पा सांस्कृतिक केन्द्रका निर्वतमान अध्यक्ष छिरिङ शेर्पा, नेपाल शेर्पा संघका सल्लाहकार लाक्पा ठिन्ले शेर्पालगायतले मन्तव्य राखेको थियो ।

इन्डिजियस

# शंखधर साकोसद्धारा रक्तदान कार्यक्रम सम्पन्न



मध्यपुर थिमि । शंखधर बचत तथा ऋण सहकारी संस्था ६८ औं राष्ट्रिय सहकारी दिवसको अवसर पारेर वृहत खुल्ला रक्तदान कार्यक्रमको आयोजना गरेको छ । उक्त रक्तदानमा १२ जना महिलासहित ४४ जनाले रक्तदान गरेको छ । सहकारीको सामाजिक उपसमितिको आयोजनामा भएको कार्यक्रम विगत १५ वर्षदेखि निरन्तर आयोजना गर्दै आएको अध्यक्ष श्याम श्रेष्ठले जानकारी दिए ।

कार्यक्रम चैत्र १६ गते शनिबार शंखधरको शालिक रहेको परिसरमा भएको थियो । भक्तपुर जिल्ला रेडक्रसको प्राविधिक सहयोगमा भएको थियो ।

# भक्तपुरको ताथली क्षेत्रमा माटो बालुवाको तस्करी बढ्दो

भक्तपुर । चाँगुनारायण नगरपालिका वडा नम्बर ९ ताथलीस्थित नालारोड आसपासको क्षेत्र माटो बालुवा तस्करको 'इपी सेन्टर' बनेको छ । दिनभर सुनसान हुने त्यहाँ स्थित खानीमा रात परेपछि भने धमाधम माटो बालुवा तस्करी हुने गरेको छ । ताथलीस्थित नालारोड आसपासको क्षेत्रमा मात्रै आधा दर्जन भन्दा धेरै स्थानमा रातभर अवैध रुपमा खानी संचालन भइरहेको पाइएको छ ।

काठमाडौं क्यान्सर सेन्टर र देवी उच्च मा वि आसपासको क्षेत्रमा त कुनै ठूलो राष्ट्रिय गौरवको आयोजना संचालन भए जस्तै गरी अवैध रुपमा माटो बालुवा उत्खनन हुने गरेको छ । विडम्बना नै भन्नु पर्छ काठमाडौं क्यान्सर सेन्टरले त माटो ओसार पसार गर्न आफ्नो गेट नै प्रयोग गर्न दिइ रहेको छ । दिनभर ताला लाग्ने अस्पतालको सहायक गेट रात परेपछि मात्र खुल्ने गरेको स्थानियको आरोप छ । चाँगुनारायण नगरपालिकाले २०८१ फागुन २५ गते सूचना नै जारी गरी घर निर्माणका लागि नक्सा पेश भएको अवस्थामा बाहेक घर घडेरी सम्याउने नाममा माटो ओसार पसार गर्न अनुमति नदिने र यदि गरेको पाइए कारवाही गर्ने निर्णय समेत प्रकाशन गरेको थियो ।

तर, माटो बालुवा ओसार पसारमा संलग्नहरुले भने उप प्रमुख रमेश बुढाथोकीको नाम बदनाम गर्दै अवैध रुपमा काम गर्दै आएका छन् । यस विषयमा उप प्रमुख बुढाथोकी भने अनविज्ञ रहेको देखिएका छन् । अवैध रुपमा हुने माटो बालुवा ओसार पसारमा बुढाथोकी कै नाम बदनाम हुदै आएपछि उनले अनुगमलाई तिब्र पार्दै आएको छ । उप प्रमुख बुढाथोकीले अनुगमनलाई तिब्र पारेपनि नगरपालिका भित्रैबाट सूचना चुहिदा अनुगमनमा गएका नगर प्रहरी रित्तै हात फर्किन बाध्य छन् । छिल्लो समय चाँगुनारायण नगरपालिकाको वडा नम्बर ९ मा मात्रै नभई वडा नम्बर १, ३, ४ लगायतका क्षेत्रमा पनि रातको समयमा अवैध रुपमा माटो बालुवा तस्करी हुने गरेको छ । यता, स्थानियहरुले भने स्थानीय सरकारको नेतृत्व गरिरहेका जनप्रतिनिधि, प्रहरी प्रशासन कै मिलेमतोमा अवैध रुपमा माटो बालुवा ओसार पसार भएको आरोप लगाएका छन् ।

# बिस्काको अवसरमा औद्योगिक साँस्कृतिक, पर्यटन, कृषि तथा व्यापार महोत्सव हुने




भक्तपुर । 'नयाँ वर्ष नयाँ सोच युवाहरुको लागि छ प्रगतिको श्रोत' भन्ने नाराका साथ नयाँ वर्ष २०८२ र भक्तपुरको प्रसिद्ध विस्का: जात्राको अवसर पारेर औद्योगिक शान्ति नेपाल संस्था र मध्यपुर ब्वाईज व्याण्डको संयुक्त आयोजनामा "नवौं भक्तपुर औद्योगिक, कृषि, साँस्कृतिक पर्यटन तथा व्यापार महोत्सव २०८१/०८२" को आयोजना गर्न लागिएको एक पत्रकार सम्मेलन गरी जानकारी गराइएको छ । कार्यक्रम भक्तपुर सल्लाघारीको तीनकुनेस्थित खुल्ला चौरमा विगतका वर्षहरुमा जस्तै यो वर्ष पनि यही चैत २८ गतेदेखि बैशाख ७ गतेसम्म ११ दिन महोत्सव संचालन हुने जनाइएको छ ।

पत्रकार सम्मेलन मार्फत महोत्सवमा दैनिक जीवनमा प्रयोग हुने उपभोग्य खाद्यान्नका सामाग्रीहरु, भाडाकुडाको साथै बिभिन्न प्रकारका लत्ताकपडा, जुत्ताहरु, कृषि तथा हस्तकलाका सामान बिक्रीका लागि राखिने जनाइयो । मेलामा औद्योगिक उत्पादनको प्रर्दशनी, सूचना तथा विज्ञान प्रबिधिको प्रर्दशनी, अटो मोवाइल, आधुनिक कृषि औजारको प्रर्दशनी तथा विक्री हुने जानकारी गराइयो ।

त्यस्तै महोत्सवमा साना बालबालिकाहरुको लागि बाल उद्यान संचालन गर्नुका साथै ड्रागन ब्रेक डान्स, नाउ तथा विभिन्न प्रकारका बच्चाको खेलौना स्थलहरु रहने छ । साथमा रोटे पिङ्ग, रेनजर, मारुती सर्कस समेत संचालन हुने पत्रकार सम्मेलनमा मेला संयोजक दीपक थापाले भने ।

कार्यक्रममा पर्यटकीय गतिविधि, स्थानिय खाना महोत्सवका साथै दैनिक रुपमा राष्ट्रिय कलाकारहरुको सांगीतिक प्रस्तुती हुनेछ । राष्ट्रिय स्तरका कलाकारहरुको हाँस्य व्यङ्ग्य तथा फेशन ज्याप तथा नृत्यहरु, नृत्य प्रतियोगिताले महोत्सव थप आकर्षण बन्ने विश्वास लिइएको छ । महोत्सवस्थलमा स्थानिय हस्तकला, कृषि उत्पादनलाई समेत समावेश गर्ने तयारी गरेको छ ।

मेलामा बिक्री गरिने सामानहरुमा २० प्रतिशतदेखि ५० प्रतिशतसम्म छुटको व्यबस्था गरिएको छ । यस महोत्सवमा १ सय ५० स्टल रहने छ । करिब पाँच लाख भन्दा बढी उपभोक्ताले महोत्सव अवलोकन गर्ने अपेक्षा लिएको छ । महोत्सवलाई व्यवस्थित गर्न रु. ५० र रु. ८० प्रवेश शुल्कको व्यबस्था गरिएको छ । साथै स्थानीय उत्पादनको स्टल राख्न चाहनेहरुका लागि नि:शुल्क रुपमा १० वटा स्टल उपलब्ध गराइने पनि आयोजकले जानकारी दिए । विद्यार्थी र जेष्ठ नागरिकलाई विशेष छुटको व्यवस्था गरिएको मेलाले भक्तपुर, काठमाडौ, ललितपुर, काभ्रेदेखि आसपासका जिल्लाका वासिन्दाले समेत लाभ लिन सक्ने जनाइएको छ ।

बैशाख १३ गते सोही स्थानमा चर्चित गायक गायिकाहरुको प्रस्तुति रहने भक्तपुर सांगतिक साँझ-२०८२ को समेत आयोजन गर्न लागिएको औद्योगिक शान्ति नेपाल संस्थाका अध्यक्ष सन्दिप महतले बताए ।

# भक्तपुरका अनाथ नानीबाबुहरुलाई सहयोग




भक्तपुर । आमाबुबा दुवै नभएका अनाथ बालबालिकाहरु मात्रै पढ्ने भक्तपुरको एउटा स्कुलका ससाना स्कुले बालबालिकाहरुलाई एउटा परिवारका ससाना दुई दाजु बहिनीले मंगलबार सहयोग गरेका छन् । भक्तपुर नगरपालिका वडा नं ३ दरवार क्षेत्रस्थित बालमन्दिर आधारभूत विद्यालयमा अध्ययनरत २३ जना बालबालिकाहरुलाई कक्षा ७ मा पढ्ने लक्ष्यजीत र कक्षा ५ मा पढ्ने समृद्धि मल्लले शैक्षिक सामाग्री सहयोग दिएका हुन् । बालबालिहरुलाई अध्ययनका लागि आवश्यक किताब कापी राख्ने झोला, कापी, कलम, पेन्सिल, कटर, पोशाक, जुता, मोजालगायतका लताकपडा तथा नगदसमेत उनीहरुले सहयोग गरेका हुन् ।

स्कुलकी प्रिन्सिपल न्हुछेंलक्ष्मी गोराका अनुसार स्कुलमा नर्सरी, केजी र कक्षा १ गरी तीन वटा कक्षाहरु सञ्चालित छन् । यी तीन वटा कक्षाहरुमध्ये नर्सरीमा ५ जना, केजीमा ७ जना र कक्षा १ मा ११ जना गरी स्कुलमा कुल २३ जना विद्यार्थीहरु अध्ययनरत छन् । तर ती सवै विद्यार्थीहरु आमाबुबा दुवै नभएका अनाथ हुन् । उनीहरु सवैलाई नै सामाग्रीहरु हस्तान्तरण गरिएको हो । उनीहरु सवैजना स्कुलमै खाने, वस्ने र सुत्ने गर्दछन् ।

दाता भाइबहिनी लक्ष्यजीत र समृद्धिले नै एकएक जना विद्यार्थीहरु गरेर सवैलाई लहरै राखेर सामानहरु हस्तान्नरण गरेका थिए । त्यस अवसरमा स्कुल व्यवस्थापन समितिका अध्यक्ष तथा भक्तपुर नगरपालिका वडा नं ३ का वडा अध्यक्ष राजकृष्ण गोरा प्रमुख अतिथि भएर स्कुल पुगेका थिए ।

काठमाडौंको काँडाघारीमा कक्षा ५ मा अध्ययनरत सानो नानी समृद्धिले दानको महत्व बुझ्ेकाले आफू भन्दा साना स्कुले छात्रछात्राहरुलाई सहयोग गरेको बताइन् । यसका लागि आफूहरुको आमाबुबाहरुले सामानहरु उपलब्ध गराएको जानकारी उनले गराइन् । पहिला उनीहरुका हजुरआमा स्वर्गीय त्यही स्कुलकी प्रिन्सिपल लोचनाकुमारी मल्लको स्मृतिमा सहयोग गरेको समृद्धिले बताइन् । उनका अनुसार यसअघि पनि उनीहरुले अरु स्कुलहरुमा पनि यस्तै सहयोग गरिसकेका छन् । समृद्धिका दाजु लक्ष्यजीतले आफू भन्दा कमजोरहरुलाई सहयोग गर्न पाएको खुशी लागेको बताए ।

कार्यक्रममा प्रमुख अतिथि स्कुल व्यवस्थापन समितिका अध्यक्ष राजकृष्ण गोराले ससाना नानीबाबुहरुले आफू भन्दा साना नानीबाबुहरुलाई गरेको यो सहयोग अविष्मरणीय रहेको बताए । यसले ससाना अनाथ नानीबाबुहरुको पढाइमा सहयोग हुने विश्वास व्यक्त गरे ।

कार्यक्रममा जनाइए अनुसार बालबालिकाहरुका खान, लाउनका लागि व्यवस्थापन बाल मन्दिरले गर्दै आएको छ । त्यसका लागि एकजना भान्छे र दुईजना सहयोगी गरी तीन जना व्यक्ति खटाइएको छ । स्कुलमा भने प्रधानाध्यापिकासहित दुईजना दृष्टिविहीन शिक्षकशिक्षिकासहित तीन जना शिक्षकशिक्षिकाहरु रहेका छन् । उनीहरुलाई भने नेपाल सरकारले नै शिक्षकका रुपमा पारिश्रमिकको व्यवस्था गर्दै आएको छ ।

सवैले किताव कापी राख्ने झोलालगायतका विभिन्न सामानहरु पाएपछि ससाना अनाथ बालबालिकाहरु खुशी देखिएका थिए । कार्यक्रमको संयोजन प्रेमध्वज मोक्तानले गरेका थिए ।

# जमिन मुनि लुकाईएको देवताको पुजा

घोडेजात्राको अघिल्लो दिन काठमाडौ उपत्यकाका नेवाःहरु पाहाँचह्रे मनाउन ब्यस्त हुन्छन् । पाहाचह्रे वा लुकु महाद्यः को रुपमा नेवाःहरु जमिन मुनि लुकाईएको देवतालाई पुजा गर्ने गर्दछन् । जसरी जे जस्तो रुपमा पुजा गरिए पनि वास्तवमा यो भूमिपुजा हो । अर्थात प्रकृति पुजा हो । नेवाः संस्कृति प्रकृति पुजाकै रुपमा शुरु भएको हो र पछि कलश पुजा गर्न थालेका हुन् । किंवदन्तीलाई जे जसरी भनिए पनि उपत्यकामा गाई पालेर जीविकोपार्जन गर्ने गोपालहरुले जमिन मुनिको ढुङ्गालाई गाईलाई आवश्यक घाँस दिने देवताको रुपमा पुज्दथे । पछि पशुको रक्षकको रुपमा पशुपति भनियो र पुज्न थालियो । यिनैको समयमा शुरु भएको थियो पाहाचह्रे । नाम बदलियो होला, पुजाका शैली बदलियो होला तथा चाडका कथा बदलियो होला । तर परम्परा त्यहीँ नै हो ।

पाहुना सत्कारका रुपमा पाहाचह्रे नामाकरण कहिलेबाट भयो यकिन भन्न सकिदैन । उपत्यकामा प्रचलित केही किंवदन्तीले पाहाचह्रे नामाकरण भएको कारण भने देखाउँछ । किंवदन्ती इतिहासका आधारले बनेका हुदैनन् । तर किंवदन्ती केवल कपोलकल्पित मात्र पनि हुदैनन् । त्यसमा केही हिस्सा इतिहास वा सत्यतासंग पनि मेल खान्छन् ।

पहिलो किंवदन्ती अनुसार सात दिदीबहिनी अजिमामा गरिव लूति अजिमालाई पाहुना खान जाने बेला हेला गरेको किंवदन्ती प्रचलित छ । भने अर्को किंवदन्ती अनुसार साढेसाती दशाबाट मुक्त हुन साढे सातवर्ष महादेव फोहरमा लुकेर बसेको तथा पाहाचह्रेका दिन बाहिर निस्केको कथा पनि प्रचलित छ ।

पहिलो किंवदन्ती अनुसार

उपत्यकावासी अष्टमात्रिका मान्ने गर्दछन् । उपत्यकालाई यिनै अष्टमात्रिकाले रक्षा गरिरहेको विश्वास गर्दछन् । हिन्दू पुराणले अष्टमातृकाका नाम भिन्न दिए पनि काठमाडौ उपत्यका वरपर रहेका अष्टमात्रिका भने यि हुन् । १. कंग अजिमा (कंकेश्वरी) २. न्यतमरु अजिमा (स्वेतकाली, नरदेवी) ३. लूति अजिमा (इन्द्रायणी, ढल्को) ४. म्हैपि अजिमा (ज्ञानेश्वरी, म्हैपि) ५. मैति अजिमा (पञ्चकुमारी, बालकुमारी) ६. टकती अजिमा (निलबाराही, कालीमाटी) ७. बसला अजिमा (बसलादेवी, पशुपति) र ८. लूमढी अजिमा (भद्रकाली, टुडिखेल) । हुन त यस बाहेक अन्य २६ अजिमाहरुले पनि सहायकका रुपमा उपत्यकावासीको रक्षा गरिरहेको मानिन्छ ।

किंवदन्ती अनुसार पाहा चह्रेको दिन यिनै आठ दिदीबहिनी अजिमाहरुको एकै ठाँउमा भेला भएर भोज खान बसेका हुन्छन् । आठ मध्य जेठी लूती अजिमा गरिव थिइन् राम्रो कपडा पनि थिएन । उनको बच्चाहरु पनि दुब्ला पातला थिए । जसले गर्दा बहिनीहरुले हेला गरेर लूती अजिमा र उनकी छोराछोरीहरुलाई खान पनि दिएनछन् । छोराछोरी पनि भोकले ब्याकुल भए पछि लूती अजिमा त्यहाँबाट केही नभनि बाहिर निस्केछ । घर फर्कदा बाटोमा फर्सी भेटेपछि त्यहि पकाएर भएपछि बच्चाहरुलाई खुलाउछु भन्दा फर्सी सुन भएछ । सुन बेचेर अजिमाले राम्रा राम्रा लुगाहरु किनेछ । मिठो मिठो खान थालेछ । अर्को वर्ष फेरी चाडको दिन दिदीबहिनी भेला हुँदा लूती अजिमा र बच्चाहरुले राम्रो र सुकिलो लुगा लगाएको हुँदा बहिनीहरुले खान दिएछ । तर लूती अजिमाले खानेकुरा नखाइ सबै आफ्नो र छोराछोरीहरुको लुगामा दलेछ । अनि बहिनीहरुले किन खानेकुरा नखाएर यस्तो गरेको भनेर सोध्दा लूती अजिमाले तिमीहरुले मलाई होइन लुगालाई खान दिएको रहेछौ त्यसैले लुगालाई खान दिएको भनेछ । यसपछी फर्केकी लूती अजिमा कहिल्यै फेरी बहिनीहरुकोमा आएनछन् । यसैले अचेल पनि असनमा खट जुधाउने जात्रामा सातवटा खटमात्र जुधाइन्छ । लूती अजिमाको जात्रा बाला चतुर्दशीको दिन मनाउने गरिन्छ ।

दोश्रो किंवदन्ती अनुसार

पाहा चह्रेको अर्को महत्वपूर्ण कथासंग पनि गाँसिएको छ । साढेसातीको दशा लाग्ने त हामीले ज्योतिष शास्त्रमा सुनेकै छौ । एक दिन शनी महाराजले महादेवलाई अब हजुरलाई पनि साढेसातीको दशा लाग्दैछ भने पछि महादेवले मलाई के को साढेसातीको दशाले छुन्छ भनेर भागेर फोहर थुप्रेको ठाँउमा लुक्न गएछ । साढे सात वर्ष पछि महादेव फोहरको थुप्रोबाट निस्केर शनिदेवलाई सोधेछ खै त मलाई साढेसाती दशा लागेको । शनिले जवाफ दिएछ साढेसाती दशा नलागेको भए हजुर यस्तो फोहर भित्र बस्नुहुन्थ्यो । हजुरलाई दशा लागेर नै यस्तोमा बस्नु परेको ।

यसरी साढे सात वर्ष सम्म लुकेर बसेका महादेव (लुकुमाद्यः) निस्केको दिनमा नै पाहाचह्रे मनाउने गरिएको भन्ने बिश्वास गरिन्छ । पाहा भनेको पाहुना र चह्रे भनेको चतुर्दशीको दिन । चैत्र कृष्ण चतुर्दशीको दिन फोहरबाट निस्केर ज्यापूको घर पाहुना खान पुगेको दिन भएको हुँदा पाहाचह्रे भनिएको हो । यस दिन लुकुमाद्यःको पुजा गरेर घरमा रहेको फोहरहरु फाल्ने तथा खाल्डाखुल्डीहरु सफा गर्ने गरिन्छ ।

यस दिनलाई पिशाच चतुर्दशी पनि भन्ने गरिन्छ । फोहरको डुंगुरमा लुकेर बसेको महादेवलाई पिशाचका रुपमा पुजा गर्ने हुँदा पिशाच चतुर्दशी भन्ने गरिएको भन्ने गरिन्छ । वास्तवमा पाहाचह्रे गाईपालनमा निर्भर गोपालवंशीहरुले गाईको लागि घाँस उत्पादन गरिदिने देवताका रुपमा जमिन खनेर भित्र राखिएको शिलालाई पुजा गर्दथे । यहि नै पछि लिच्छवी कालमा पशुको देवताका रुपमा पशुपति भयो भने मल्लकालमा लुकु महाद्य पनि बन्यो ।

सातौ शताब्दीमा शिवका अनन्य भक्त अंशुवर्माले शिवको मुर्ति बनाएर पूज्न थालेका थिए । शिवको बाहनका रुपमा साँढेलाई पनि पुजा गर्दथे । पशुपतिको रुपमा अंशुवर्माले नै पुजा गर्न थालेका थिए । १३औं शताब्दीमा बंगालका सुल्तान समसुद्दिन इल्यासको आक्रमणमा सो मूर्ति तोडिए पछि बल्ल हालको चतुर्मुखी शिवलिङ्गको रुपमा पशुपतिको मूर्ति स्थापना गरिएको थियो ।

घोडेजात्रा

किंवदन्ती अनुसार टुँडिखेलको दक्षिण पूर्वको रुखमा एउटा गुरुमापा भन्ने राक्षस बस्दथ्यो । जसले उपत्यकामा दुख दिन थाल्यो । बच्चाहरु पनि खान थाल्यो । अन्तत तान्त्रिकको सल्लाहले राक्षसलाई टुँडिखेलमा गाडियो । हरेक सालको अन्तमा त्यहि राक्षस बाहिर आउन नसकोस भन्दै घोडाको टापले कुल्चने गरिएको भन्ने गरिन्छ । तर किंवदन्ती जे जस्तो भए पनि वास्तवमा सैनिकहरुले आफ्नो हैकम र रवाफ देखाउन नै घोडेजात्रा गरिएको आभास हुन्छ ।

घोडे जात्रा वास्तवमा कुनै जात्रा वा पर्व नै होइन । यो त केवल तमासा मात्र हो । पिशाच चतुर्दशीको दिन उपत्यकाका खासगरि काठमाडौका नेवाःहरु पाहाचह्रे मनाउने गर्दछन् । पाहाचह्रेको भोलि पल्ट राजाहरु आफ्ना भाइभारदारका साथ लश्करै मन्दिर दर्शन गर्न जाने गर्दथे । यो लश्कर तथा राजा पनि देख्न पाउने भए पछि उपत्यकावासी तमासा हेर्न टुडिखेल पुग्दथे । शाहकालको शुरुमा पनि यहि क्रम रहिरह्यो । तर राणाकालमा आइपुग्दा भने राणाहरुले टुँडिखेलमा आफ्ना सैनिक शक्तिको प्रदर्शन गर्दै घोडे जात्रालाई बिशाल रुप दिए ।

हुन त उपत्यकावासीहरुले घोडेजात्रासंग गाँसेर एउटा किंवदन्ती पनि सुनाउने गर्दछ । जुन अत्यधिक प्रचलित पनि छ । इतुंबहामा बस्ने केशवचन्द्र जुवाको लतले सम्पति सिध्याएर बेहाल भएका थिए । एकदिन आफ्नो दिदीकहाँ खाना खान पुगेका उनले खाना पस्केको सुनको थाल नै चोरेर जुवामा हारे । अर्को पटक फेरी दिदीकहाँ पुगेका उनलाई दिदीले चाँदीको थालमा पस्केर दिए त्यो थाल पनि चोरेर जुवामा हारे । तेश्रो पटक दिदीकोमा पुगेका उनलाई भने दिदीले थालमा खाना नदिएर भुइमा राखिदिए । भोक र रिसले बौलाएका उनले खाना कपडामा पोको पारेर हिडे । थाकेर रुख मुनि निदाएका बेला उनले कपडामा पोका पारेर ल्याएको खाना सबै रुखमा बस्ने चराहरुले खाएर सिध्याइदियो ।

केशवचन्द्रको खाना खाएका चराहरु सबै रुखमा नै बसेका थिए । केशवचन्द्र ब्युझँदा खाना सबै खाइसकेको देखेर । रिसले बौलाएका केशवचन्द्रले चरालाई हान्न के लागेका थिए चराले सुनको बिष्टा गरिदिए । यस पछि खुशी भएका केशवचन्द्रले सबै सुनका बिष्टा जम्मा गरेर कपडामा पोका पारेर बोक्न खोज्दा उठाउन नै सकेनन् । त्यहि समय गुरुमापा नाम गरेको राक्षस घुम्दै घुम्दै खानाको खोजीमा त्यहि आइपुगे । गुरुमापाले केशवचन्द्रलाई नै खान खोज्यो । बाठो केशवचन्द्रले गुरुमापालाई आफूले जम्मा गरेको सुनको पोका बोकेर घर जान आग्रह गर्दै घर पुगेपछि सिङ्गै राँगो र तीन मुरी चामलको भात खान दिने बाचा गरे । यसरी घर लगिएका गुरुमापालाई केशवचन्द्रले बचन अनुसारको खाना दिए । टन्न खाना खाएपछि गुरुमापा निदाउन थाले । तीनदिन पछि ब्युझिए पछि फेरी खाना माग्न थाल्यो । यसरी लुकाएर राक्षसलाई खाना खुवाएको छिमेकीले थाहा पाए पछि केशवचन्द्रले राक्षसलाई टुँडिखेलमा रहेको रुखमा लुकेर बस्न र त्यहि खाना ल्याइदिने बचन दिए । तर यसरी टुडिखेल बसेका गुरुमापा कहिले काँही शहर पसेर बच्चा चोरेर खान थाल्यो । जसले गर्दा मानिसहरु सबै मिलेर उनलाई पिटेर टुडिखेलमा लडाएर उनको शरिर माथि घोडा दौडाएर घायल बनाइ त्यहि गाडिदिए । गुरुमापा उठेर शहर पसेर बच्चाहरु नखाओस भनेर वर्षेनी टुडिखेलमा गुरुमापाको शरिर माथि घोडा दौडाउन थालियो भन्ने गरिन्छ । साथै गुरुमापालाई केशवचन्द्रले एउटा राँगोको मासु र तीन मुरी चामलको भात खुवाउने बाचा गरेको हुँदा फागु पूर्णिमाको दिन भात पकाएर लाने चलन रह्यो ।

फागुन पूर्णिमाको अघिल्लो दिन किला घःका ज्यापू समाजले यँपी ख्यः(भुरुङखेल)मा राँगो काटेर गुरुमापालाई चढाउने र भोलिपल्ट इतुंबहाःको केशवचन्द्र विहार नजिकैको भुतु क्यवःमा २० पाथी चामलको भात पकाइ टुडिखेलमा लगेर टुडिखेलको बिचमा गुरुमापाको भाग चढाइ समाजका सबै लहरै बसेर टुडिखेलमा भोज खाने चलन छ । यसरी घोडे जात्रा शुरु भएको भन्ने किंवदन्ती पनि उपत्यकामा प्रचलित छ ।

आखिर जे जसरी भए पनि उपत्यकामा पाहाचह्रे र घोडे जात्राले भने आजसम्म निरन्तरता पाइरहेकै छ । सामाजिक सञ्जालबाट



# दिमागमा चिप प्रत्यारोपण गरेको व्यक्तिको भिडियो सार्वजनिक

एजेन्सी । न्युरालिंकले दिमागमा चिप प्रत्यारोपण गरेको पहिलो व्यक्तिको भिडियो सार्वजनिक गरेको छ । हेल्ट टेक कम्पनी न्युरालिंकले गत बिहिबार चिप प्रत्यारोपण गरेको पहिलो व्यक्ति (नोलन आर्बाघ)को भिडियो सार्वजनिक गरेको हो ।

कम्पनीका एक इन्जिनियर ब्लिसले आर्बाघले कम्प्युटरमा चेस गेम खेलिरहेको भिडियो खिचेर कम्पनीको आधिकारिक एक्स ह्यान्दलबाट अपलोड गरेका छन् । २९ बर्षिय आबार्घ आठ वर्षअघि डाइभ गर्ने क्रममा दुर्घटनामा परेका थिए । त्यसपछि उनको घाँटी भन्दा तलको भाग पक्षघात भएको थियो । भिडियोमा आर्बाघले ल्यापटपको स्क्रिनको चारैतर्फ कर्सर घुमाएर अनि स्क्रिनमा भएको म्युजिक प्लेयरलाई बन्द गरेका छन् ।

भिडियोमो उनले आफूलाई चेस खेल्न मन लाग्ने बताएका छन् । प्रत्यारोपणबाट आफूलाई चेस र सिभिलाइजेसन सिक्स गेम खेल्ने अनुमति समेत प्राप्त भएको बताएका छन् । उनले स्क्रिनमा क्रसर कन्ट्रोल गर्ने कार्य सिक्नका लागि अन्दाज गरिएको चाल र प्रयास गरिएको चालबीचको अन्तर थाहा पाएको समेत बताएका छन् । आर्बाघका अनुसार दिमागको कन्ट्रोलबाटै विभिन्न क्रियाकलापहरु गर्न, कम्प्युटर गेमहरु खेल्न सजिलो भएको, भाषाहरु पनि सिकिरहेको बताएका छन् ।

त्यस्तै चिप प्रत्यारोपण प्रक्रिया सहज भएको र प्रत्यारोपण पछि कुनै जटिलता नआएको पनि भिडियोमा भनेका छन् ।

'मलाई चेस खेल्न मनलाग्छ । तर पछिल्ला केही वर्ष अघि देखि माउथ स्टिक प्रयोग गरेर चेस खेल्थे जुन एकदम कठिन थियो । प्रत्यारोपण गरेपछि अहिले म दिमागको कन्ट्रोलबाटै कम्प्युटरमा कर्सर चलाउन, चेस खेल्न निकै निकै सजिलो भएको छ । अरू खेलहरु पनि म खेल्ने गर्छु' आबार्घले भने ।

गत वर्षदेखि चिप प्रत्यारोपण गर्न न्युरालिङ्कले बिरामी भर्ना लिन थालेको थियो । एलन मस्कले सन् २०२४ वर्षको सुरुवाततिर पहिलो पटक परीक्षणको रुपमा मानिसको दिमागमा न्युरालिंकको चिप प्रत्यारोपण गरिएको जानकारी दिएका थिए । त्यसपछि आर्बाघ दिमागमा चिप प्रत्यारोण गर्ने पहिलो मानव बिरामी बनेका हुन् । सन् २०१६ देखि संचालित न्युरालिंकको मुख्य उद्देश्य मानिसको मस्तिष्कमा चिप प्रत्यारोपण गर्नु हो ।

कम्पनीको पहिलो उत्पादन 'टेलिप्याथी' नामक ब्रन चिप आर्बाघको दिमागमा प्रत्यारोपण गरिएको हो । त्यस्तै न्युरालिंकले आँखा नदेख्ने व्यक्तिले आँखा देख्न र शरीरको कुनै भागहरु नचलेको व्यक्तिले सो भाग चलाउन सक्ने चिप मनि बनाएको दाबी गरेको छ ।

# एलोन मस्कको सामाजिक सञ्जाल प्लेटफर्म एक्सको स्वामित्व परिवर्तन

एजेन्सी । अर्बपति एलोन मस्कले सामाजिक सञ्जाल प्लेटफर्म "एक्स" लाई ३३ अर्ब डलरमा बेचेका छन् । एक्स लाई मस्कको आफ्नै आर्टिफिसियल इन्टेलिजेन्स कम्पनी एक्स एआईले किनेको छ । यो अधिग्रहण सम्झौता सबै स्टक कारोबार अन्तर्गत गरिएको हो । यसको अर्थ यो सम्झौतामा सम्पूर्ण मूल्य स्टकको रूपमा मात्र तिरिएको छ । मस्कले अक्टोबर २७, २०२२ मा माइक्रो-ब्लगिङ प्लेटफर्म ट्विटर (अहिले एक्स किनेका थिए । यो सम्झौता ४४ अर्ब डलरमा गरिएको थियो । यसपछि, मस्कले २४ जुलाई २०२३ मा ट्विटरको नाम र लोगो परिवर्तन गरेर एक्स राखे ।

मस्कले एक्स मा एक पोस्टमा भनेका छन्, " एक्स एआई र एक्स को भविष्य एकअर्कासँग गाँसिएको छ । आज, हामी आधिकारिक रूपमा डेटा, मोडेल, गणना, वितरण र प्रतिभालाई एकसाथ ल्याउने दिशामा कदम चालिरहेका छौं । यो संयोजनले एक्स एआई को उन्नत एआई (कृत्रिम बौद्धिकता) क्षमताहरू र विशेषज्ञतालाई एक्स को विशाल पहुँचसँग संयोजन गरेर विशाल सम्भावनाहरू खोल्नेछ ।" उनले लेखे कि संयुक्त कम्पनीले हाम्रो मुख्य मिशन (सत्यको खोजी र ज्ञानको उन्नति) मा सत्य रहँदै अरबौं मानिसहरूलाई स्मार्ट र अर्थपूर्ण अनुभवहरू प्रदान गर्नेछ ।

एक्स का ६० करोड सक्रिय प्रयोगकर्ताहरू छन् ।

एक्स का ६० करोड भन्दा बढी सक्रिय प्रयोगकर्ताहरू छन् । मस्कले एक्स को बारेमा भने, "यो प्लेटफर्म लाखौं मानिसहरूलाई वास्तविकता जान्नको लागि वास्तविक-समय स्रोत हो । यससँगै, एक्स विगत दुई वर्षमा विश्वको सबैभन्दा कुशल कम्पनीहरू मध्ये एक बनेको छ, जुन भविष्यको विकासको लागि काम गरिरहेको छ ।" एलोन मस्कले भने कि एक्स एआइ २ वर्ष पहिले स्थापना भएको थियो । त्यसबेलादेखि यो द्रुत गतिमा बढ्दो विश्वको अग्रणी एआई प्रयोगशालाहरू मध्ये एक बनेको छ ।

एक्स एआई ले द्रुत गतिमा डाटा सेन्टर निर्माण गर्दैछ

टेस्ला र स्पेसएक्सको नेतृत्व गर्ने तथा अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पको सल्लाहकारको रूपमा काम गर्ने मस्कले एक्स एआई ले उच्च-गति र ठूला स्तरका मोडेलहरू र डेटा केन्द्रहरू निर्माण गर्ने बताए । "आज, हामी आधिकारिक रूपमा डेटा, मोडेल, गणना, वितरण र प्रतिभा संयोजन गर्ने कदम चाल्छौं," मस्कले भने ।

उनले भने कि भविष्यमा, यदि एक्स एआई र एक्स एकअर्कासँग जोडिए भने, तिनीहरूले एक स्मार्ट, अधिक अर्थपूर्ण अनुभव प्रदान गर्नेछन् । यो संयोजनले हामीलाई मानव प्रगतिलाई सक्रिय रूपमा गति दिने प्लेटफर्म सिर्जना गर्न अनुमति दिनेछ । २०२२ मा ट्विटर प्राप्त गरेदेखि, मस्कले कम्पनीमा धेरै परिवर्तनहरू गरेका छन्, जसमा निःशुल्क प्रमाणित कार्यक्रम समाप्त गर्ने, सशुल्क सदस्यताहरू सुरु गर्ने, र कम्पनीको नाम एक्स मा परिवर्तन गर्ने समावेश छ ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### तीनकुने वितण्डा पुनः नदोहोरियोस !

'राजतन्त्र' पुनःस्थापनाका लागि भन्दै 'सङ्घर्ष समिति' नै बनाएर आन्दोलन गर्ने नाममा भएको हिंसात्मक प्रदर्शनका कारण राजतन्त्रवादीहरुको वास्तविक चरित्र र अनुहार पहिलो दिन अर्थात चैत १५ शनिवार नै उदाङ्गिन पुग्यो । कथित आन्दोलनको थालनीमा नै काठमाडौंमा अराजकता मच्चाएर ठूलै अशान्ति एवं अव्यवस्था फैलाउने उनीहरूको नियत छर्लङ्ग भएको छ ।

आयोजकहरूले नै उक्साएपछि राजावादीको भिडले प्रहरीको हातको बन्दुक खोस्नेदेखि निजी घरहरूमा ढुंगामुढा र आगजनी गर्ने, राजनीतिक दलका कार्यालयमा तोडफोड गर्ने तथा पसलमा लुटपाट गर्ने र संचार माध्यम माथि आक्रमण गर्ने सम्मका कुकृत्य गरेको छ । काठमाडौंमा यसअघिका कुनै पनि राजनीतिक आन्दोलनहरूमा यस प्रकारको अराजकता देखिएको थिएन ।

राजावादीहरूले प्रहरीले अश्रुग्यास प्रहार गरेर उत्तेजित बनाएपछि आन्दोलनकारीहरू अराजक भएको दाबी गरे पनि सामाजिक सञ्जालमै व्याप्त तस्बिरहरू र भिडियो फुटेजबाट तिनको पोल खुल्छ । सङ्घर्ष समितिका कमान्डर भनिएका दुर्गा प्रसाई आफैंले गाडी हाँकेर प्रहरी घेरातिर हुइँक्याएको भिडियोले नै राजावादीको नियत स्पष्ट भएको छ ।

राजावादी भिडले आगजनी गरेको घरमा परी १ जना पत्रकारको ज्यान गएको छ । यही क्रममा अर्का एक जनाको पनि मृत्यु भएका छन् भने थुप्रै सुरक्षाकर्मी र केही राजावादी पनि घाइते भएका छन् ।

यसैगरी राजावादीले नेकपा (एकीकृत समाजवादी) र माओवादी केन्द्रको कार्यालयमा पनि आक्रमण गरेका थिए । कान्तिपुर टेलिभिजन, अन्नपूर्ण पोस्टलगायत सञ्चार माध्यम पनि अराजक राजावादीहरूको कोपभाजन भएका छन् । राजावादीको सक्कली अनुहार भने भाटभटेनी सुपरमार्केटको लुटपाटमा देखिएको छ । राष्ट्रिय स्वतन्त्र पार्टीका सचेतकको गाडीसमेत राजावादीले जलाइदिएका छन् ।

शनिवार नै भृकुटीमण्डपमा पनि समाजवादी मोर्चाले गणतन्त्रका पक्षमा जुलुस प्रदर्शन गरेको थियो । तीनकुनेमा जम्मा भएका राजावादीभन्दा भृकुटीमणड्पमा उपस्थित गणतन्त्रवादीको समूह निकै ठूलो थियो । तर, राजनीतिक समूहको प्रदर्शन भएकाले त्यो शान्तिपूर्वक सम्पन्न भयो ।

तीनकुनेमा मच्चाइएको ताण्डव हेरेपछि राजावादीलाई भित्री सहरमा प्रवेश गर्न नदिएर स्थानीय प्रशासनले सुझबुझ देखाएको सिद्ध भएको छ । यस्तै, प्रहरीलाई नै लक्षित गरेर मोटरले किच्न खोज्दा पनि संयम नगुमाएको देखियो । यद्यपि, त्यतिबेला प्रहरीले गोली चलाउनुपर्ने मत सुरक्षाविद्हरूले व्यक्त गरेका छन् । सरकारले यस वितण्डाका नायकहरूलाई पक्रन थालेको समाचार सार्वजनिक भएको छ । घटनाको पूरा छानबिन गरी भिडलाई उत्तेजित बनाउने र उपद्रोमा सम्मलित सबैलाई कानुनबमोजिम कडा कारबाही गर्न सरकारले कुनै कसर बाँकी नराखोस् । पूर्वराजा ज्ञानेन्द्र शाहकै प्रत्यक्ष संलग्नता देखियो भने पनि उन्मुक्ति दिइनु हुँदैन । उनलाई दिइएको राज्यको सुरक्षालगायत सुविधामा पुनर्विचार गर्नु पनि आवश्यक देखिन्छ । राजावादीका नाममा अराजकतत्त्वले टाउको उठाउन थालेका बेला गणतन्त्रवादीहरूले पनि आपसी मतभेद बिर्सेर ऐक्यबद्धता प्रदर्शन गरून् । दलका उपाध्यक्ष, महामन्त्रीलगायतको पनि १५ गतेको वितण्डामा प्रत्यक्ष संलग्नता देखिएकाले राष्ट्रिय प्रजातन्त्र पार्टीले पनि आफ्नो कित्ता स्पष्ट गर्नुपर्छ ।

अराजनीतिक भिडलाई उपद्रो गर्न उक्साउने 'राजावादी'बाट नैतिकताका आधारमा क्षतिको जिम्मा लिने के अपेक्षा गर्नु ? राज्य भने जनताको जिउधनमा आक्रमण गर्ने अपराधीलाई कानुनबमोजिम कारबाही गर्ने आफ्नो कर्तव्यमा नचुकोस् ।

साथै राज्यले पनि जनतामा सरकार प्रति देखिएको असन्तुष्टिको बारेमा बेलैमा गम्भीर रुपमा लिएर आम जनताको हितमा राज्य सचालनको मार्गचित्र तयार गरी दल भित्र रहेका जनता अलोकप्रिय र राज्यको सेवासुविधा माथि रजाई गर्नेको पहिचान गरी आवश्यक नीति निर्माण गर्न र कमी कमजोरीलाई सच्याउदै अघि बढ्न जरुरी छ । ताकि तीनकुने वितण्डा पुन नदोहोरियोस !

# लिम्बुवानका मुन्धुमी सम्पदाको नालीबेली–२

*● अमित थेबे 'मिहाङ'*

वि.सं. १८३१ मा गोर्खालीले विजयपुर कब्जा गरे । गोर्खालीले याक्थुङ पूर्खालाई 'तुत्तु तुम्याङहाङ याक्थुङहाङ' पुकार्दै र याक्थुङको माटोलाई 'लिम्बुवान' भन्दै सम्झौता गरेका छन् । वि.सं. १८३१ भदौ ५ गते जारी भएको लालमोहरमा याक्थुङ लिम्बुहरूको माटोलाई 'लिम्बुवान' भनेर सम्झौता गरेका छन् । रणबहादुर शाहले गजेन्द्र शाहलाई वि.सं. १८४८ चैत्र ७ गते काठमाडौंबाट लेखेको पत्रमा पनि लिम्बुवान शब्द परेको छ ।

मुगलहरूको प्रशासनिक शब्दहरूको प्रभाव गोर्खालीहरूलाई परेर हुन सक्छ लिम्बुको भूमिलाई लिम्बुवान/लिम्बुआन भनेर सम्बोधन गरेका हुन सक्छन् । किनकि, मुसलमानी ठाउँहरूको नामको पछाडि 'आन' लेखिने गरिन्छ । याक्थुङबाहेक याक्खा, देवान, आठपहरिया, याम्फू, लोहोरुङ, मेवाहाङहरूको भूमिलाई पनि लिम्बुवान भनियो ।

इतिहासकार इमानसिङ चेम्जोङले इसाको छैटौं शताब्दीमा आठ राजा र दश सरदारहरूबीच मनमुटाव भई घमासान लडाइँ भएको र सो युद्धमा दश सरदार हरूको विजय भएपछि फेदेनमा सुम्जिरी सुम्हात्लुङ स्थापना गरी लिम्बुवान नामकरण गरेको तर्क गरेका छन् ।

सङ्खुवा-अरुण-सप्तकोसी नदीपूर्व मेची नदी र चीनको स्वशाषित क्षेत्र तिब्बतदेखि नेपाल भारत सिमानासम्मको वर्तमान भूगोल लिम्बुवान हो । ऐतिहासिक हिसाबले पूर्वमा टिष्टा खोलासम्मको भूभाग भएपनि सन् १८१६(१८७३) मा नेपाल-अङ्ग्रेजबीच भएको सुगौली सन्धीका कारण मेचीपूर्वको भूभाग गुमेको हो ।

ऐतिहासिकताका आधारमा पश्चिम-दक्षिण सिक्किम, पश्चिम बंगालको दार्जिलिङ, कालिम्पोङ, सिलगढी सबै लिम्बुवाको शाषकीय भूगोल हुन् । खुम्चिनुअघि लिम्बुवान दश थुममा विभाजित भएपनि राणाकालसम्म आइपुग्दा १७ थुममा विभाजित भएको थियो । याक्थुङ इतिहासका अध्येता/लेखक डा. कमल तिगेलाका अनुसार वि.सं १८३७ मा शाहहरूले पहिलो फेदाप थुम निर्माण गरे ।

हालको छथर, फेदाप र आठराईको समग्र भूभाग फेदाप थुमभित्र पारिएका थिए । पछि, १८६७ मा छथर थुम बनेको कागजात पाइएको जनाएका छन् । याक्थुङ बाहेक अन्य थातथलो खुल्ने आदिवासीको बसोबास भएको इलाका सात थुम हो ।

यद्यपि इतिहासकार माबुहाङले २३ थुमहरूको नाम किटान गरेका छन् । त्यसमा सङ्खुवाउत्तर, सभाउत्तर, पाँच खप्पन, पाँच मझीया, दशमझीया, तमोरखोला, मैवाखोला, मिवाखोला, याङरुप, आठराई, फेदाप, छथर, चौबिस, मिक्लुक, पाँचथर नुभोउत्तर, पाँचथर नुभोदक्षिण, सोह्र खाल्सा, धनकुटा, झल्हारा बेल्हारा, ईलाम, माइपार, पुवापार र फाकफोक थुमहरू पर्छन् ।

वि.सं. २००८ मा राजा त्रिभुवनले याक्थुङहरूलाई दिएको लालमोहरमा लिम्बुवानको सिमाना पश्चिममा अरुण(सङ्खुवा-अरुण), पूर्वमा मेची, उत्तरमा भोट र दक्षिणमा माल सिमानासम्म देखिन्छ । इलामको हात्तीलेददेखि मोरङ सतिसालेको हुँदै चारकोशे झाडी(धरान)को ठूलो फायर लाइन उत्तर लाखसिमाना थियो । माल भनेको रैकर र लाख भनेको किपट जग्गालाई भनिएको हो ।

सम्पदा

देशको पहिचान र गौरव दिलाउने हाम्रा पूर्वजबाट प्राप्त महत्वपूर्ण र संरक्षण योग्य स्थान, वस्तु, कला, संस्कृति र प्राकृतिक परिवेशलाई सम्पदा भनिन्छ । राष्ट्रको एतिहाषिक, धार्मिक र प्राकृतिक सौन्दर्य या महत्व झल्काउने स्थल या संरचनाहरू नै सम्पदा हो । सम्पदा मूर्त र अमूर्त हुन्छन् । मूर्त सम्पदा भनेका त्यस्ता सम्पदा हुन् जुन सम्पदा भौतिक रूपमा रहेका हुन्छन् । यस्ता सम्पदालाई हामी प्रत्यक्ष देख्न वा हेर्न सक्छौं ।

मन्दिर, गुम्बा, वनजङ्गल, धार्मिक ग्रन्थहरू, लोक तथा शास्त्रीय नृत्यहरू, परिकारहरू मूर्त सम्पदाका उदाहरण हुन् ।अमूर्त सम्पदा भनेका त्यस्ता सम्पदा हुन् जुन सम्पदा मूर्त रूपमा नदेखिने हुन्छन्, रूप नभएको र आकार नभएको हुन्छ । संस्कारहरू, प्रचलनहरू, चाडपर्व मनाउने तरिकाहरू, पूजा विधि, परिकार बनाउने तरिका, चित्र बनाउने तरिका यसका उदाहरण हुन् ।

विश्व सम्पदा र युनेस्को

संयुक्त राष्ट्र संघको विशेष निकायका रूपमा संयुक्त राष्ट्र शैक्षिक, वैज्ञानिक तथा साँस्कृतिक संगठन(युनेस्को) सन् १९४५ नोभेम्बर १६ मा गठित भएको हो । यसको निश्चित उद्देश्य शान्ति र सुरक्षाका लागि योगदान दिनु हो जुन कि शिक्षा, विज्ञान एवं संस्कृतिको अन्तरराष्ट्रिय सहयोगद्वारा हुन्छ । जसले अगाडि न्याय, विधिको नियम एवं मानवाधिकार तथा मूलभूत स्वतन्त्रता हेतु वैश्विक विचार स्थापित गर्छन् ।

यस्तो संयुक्त राष्ट्रको राजपत्रमा घोषित भएको थियो । यो लिग अफ नेसन्सको प्रज्ञावान सहयोगमा अन्तराष्ट्रिय आयोगको उत्तराधिकारी हो । यसको मुख्यालय पेरिस, फ्रान्समा स्थित छ । हाल युनेस्कोमा जम्मा १९५ सदस्य राष्ट्र रहेका छन् । यसको २७ क्लस्टर कार्यालय र २१ राष्ट्रिय कार्यालयहरू छन् ।

युनेस्कोले अद्वितीय वैश्विक महत्वभएका संसारभरका साँस्कृतिक र प्राकृतिक स्थलहरूलाई विश्व सम्पदा घोषणा गरेको छ । जसमध्ये ११९९ विश्व सम्पदा क्षेत्रहरू रहेका छन् । १४५ देशमा ७३० अमूर्त सम्पदाका तत्वहरू घोषित भएका छन् भने १३४ देशमा ७४८ बायोस्पेयर रिजर्भस छन् ।

त्यस्तै, ४८ देशमा २१३ युनेस्को ग्लोबल जियोपार्कस छन् । त्यस्तै, ४८ सीमापार, १६८ सम्पदा भएका साझेदार राज्यहरू छन् । ११९९ मध्ये ९३३ साँस्कृतिक, २२७ प्राकृतिक र ३९ मिश्रित सम्पदा हुन् । जसमध्ये ५६ खतराको सूचीमा छन् ।

नेपालमा विश्व सम्पदा सूची

युनेस्कोको विश्व सम्पदा क्षेत्रमा नेपालका विभिन्न सम्पदा (साँस्कृतिक र प्राकृतिक)लाई सूचीकृत गरिएका छन् । साँस्कृतिक सम्पदाअन्तर्गत काठमाडौं उपत्यकाभित्रका सात स्मारकसहित क्षेत्र उपत्यका आसपासका लिच्छविकालीन मठ मन्दिरसँगै चार शक्तिपिठ( तीन वटा ऐतिहासिक दरबार, दुई वटा बौद्ध स्तुप र दुई वटा हिन्दू मन्दिर स्मारक) र लुम्बिनी तथा प्राकृतिक सम्पदा अन्तर्गत चितवन र सगरमाथा राष्ट्रिय निकुञ्ज रहेका छन् । उपत्यकाका ती सम्पदालाई सन् १९७९ मा युनेस्कोले विश्व सम्पदा क्षेत्रमा सूचीकृत गरेको थियो ।

सन् २०१४ सम्ममा नेपालका चार वटा सम्पदाहरूलाई संयुक्त राष्ट्र शैक्षिक, वैज्ञानिक एवं सांस्कृतिक सङ्गठन(युनेस्को)द्वारा विश्व सम्पदा क्षेत्रमा मान्यता प्रदान गरिएको छ । नेपालमा रहेका विश्व सम्पदा क्षेत्रहरू सम्पादन र सूचीकृत विश्व सम्पदा सूचीमा सूचीकृत ६३० सम्पदाहरू छन् । नेपालका सम्भावित विश्व सम्पदा स्थलहको सूची पनि तयार भएका छन् ।

नेपालले सन् १९९६ र २००८ मा गरी दुई पटक विभिन्न राष्ट्रिय सम्पदाहरूलाई सम्भावित विश्व सम्पदाका सूचीमा सूचीकृत गरिसकको छ । जसमध्ये सन् १९९६ मा सम्भावित विश्व सम्पदाका सूचीमा सूचीकृत गरेको लुम्बिनी, भगवान बुद्धको जन्मस्थललाई सन् १९९७ मा नेपाल सरकारका आफ्नै पहलमा गरिएका अनुरोधअनुरुप प्रक्रियागत रुपमा नै विश्व सम्पदा सूचीमा सूचीकृत गरिएको थियो ।

यसका अतिरिक्त हालसम्म सम्भावित विश्व सम्पदाको सूचीमा सूचीकृत अवस्थामा रहेका राष्ट्रिय सम्पदा स्थलहरूमा मुक्तिनाथ उपत्यका, मुस्ताङको गुफाको कलात्मक वास्तुकला, खोकना गाउँ, गौतम बुद्धको रामग्राम स्तुपा, पनौतीको पूर्व मध्यकालीन संरचना, मध्यकालीन गोरखा दरबार, शाक्यवंशी राज्यको तिलौराकोटको पुरातात्विक भग्नावशेष, मध्यकालीन लोमान्थाङ सहर, मध्यकालीन कीर्तिपुर, नुवाकोट दरबार, रामजानकी मन्दिर, दैलेखको भूर्ति मन्दिर, कुरुक्षेत्रको ऋषिकेश वास्तुकला, सिञ्जा उपत्यका, मध्यकालीन तानसेन सहर, वज्रयोगिनी र शङ्खुको प्रारम्भिक वस्ती छन् ।

लिम्बुवानका सम्पदाहरूको चर्चा

लिम्बुवान पनि प्राकृतिक, साँस्कृतिक र पुरातात्विक मत्वको हिसाबले सम्पन्न भूगोल हो । सम्पदाहरूको प्रकृतिका आधारमा तिनीहरूलाई सूची बनाएर मुख्यतः चार प्रकारमा वर्गीकरण गर्नु उत्तम हुन्छ । ती मुन्धुमी सम्पदा, ऐतिहासिक एवम् पुरातात्विक सम्पदा, मानवनिर्मित सम्पदा र अमूर्त साँस्कृतिक सम्पदा हुन् । त्यसो गरे मात्रै सम्पदाको लेखाजोखा, वर्गीकरण, अभिलेखीकरण र संरक्षण गर्न सम्बन्धित समुदाय, सरकार र सरोकारवाला निकायहरूलाई सहज हुन्छ ।

मुन्धुमी सम्पदा

येवा येमानी, साम्बा र फेदाङ्माहरुले एकराते होस् वा तीन राते तङ्सिङ तक्मा गर्दा मौलिक लयमा मौखिक रुपमा फलाक्दा आउने अनेक भौतिक स्थलहरुसँग याक्थुङ लिम्बु समुदायको जीवन दर्शन जोडिएको छ । ती भौतिक स्थलहरु कुनै गुफा छन्, कुनै भीरपहरामा फैलिएका ढुङ्गा छन् ।

तेह्रथुम जिल्लामा रहेको यो ढुंगामा युवाले तान बुनेको विश्वास गरिन्छ ।

मुख्यगरी तमोर नदी (इम्बिरि याङ्धाङवा), काबेली नदी (काङ्वा) सेरोफेरोका स्थानलाई याक्थुङ मुन्धुमले सम्बोधन गरेको छ । याक्थुङ लिम्बुहरुलाई मुन्धुमले लुङबोङ्सा-खाम्बोङ्सा( ढुङ्गा माटोका अधिकारी/भूमिपुत्र) भनेर चिनाएको छ ।

याक्थुङ मुन्धुममा सुनसरीको बराहक्षेत्र-कोका नदीदेखि उत्तर ताप्लेजुङको फक्ताङलुङ(कुम्भकर्ण हिम श्रृङ्खला) दक्षिणका अनेक स्थानका वर्णन गरिएको छ । ती भौतिक स्थलहरुको व्यापक बर्णन गर्दै याक्थुङ मुन्धुमले प्रकृति, मान्छे र पशुपंक्षीवीचको इकोसिस्टमसंग जोडेको छ । याक्थुङ मुन्धुमले प्रकृति वा चराचर जगत सन्तुलित हुन आवश्यक सबैथोक हुनै पर्छ भन्छ । पूर्णता वा सम्पूर्णताको सौन्दर्यलाई पुष्टि गर्न अनेक व्यावहारिक कथाहरु छन् ।

यसबारे नेपाल प्रज्ञा प्रतिष्ठानका पूर्व कुलपति वैरागी काँइला र डा चैतन्य सुव्वाले थप पुनर्व्याख्या गर्ने प्रयास गरेका छन् ।

याक्थुङ मुन्धुमले भारतमा पर्ने गंगा, जमुना र सरस्वती नदीको वर्णन गर्दैन । फक्ताङलुङभन्दा उत्तर चीन तिब्बतको पनि खासै वर्णन गर्दैन । कोशी-अरुण नदीपश्चिम हुँदै काठमाडौं उपत्यकासम्मको पनि एक शब्द वर्णन र व्याख्या गर्दैन । किरातकाल, लिच्छवी कालका शासकका बारेमा पनि एक शव्द बोल्दैन मुन्धुम । जे जति जति बोल्छ, व्याख्या र वर्णन गर्छ कोशी-अरुण पूर्वका सङ्खुवासभा, धनकुटा, सुनसरीको उत्तरी क्षेत्र, ताप्लेजुङ, तेह्रथुम, पाँचथर, इलाम, झापाका उत्तरी क्षेत्रका बारे अनेक पात्र मार्फत आदिम नीति कथादेखि प्राकृतिक घटना शैलीमा मानव सभ्यता विस्तार भएको कुरा गर्छ ।

केही प्रमुख मुन्धुमी स्थल

याक्थुङ लिम्बुका मुन्धुम र इतिहासका अध्येताहरुको बहस र दाबीअनुसार मुन्धुमी स्थल भएका स्थानबाटै याक्थुङ सभ्यताको विस्तार भएको हो । जुन तमोर आसपास पर्छन् । वि.सं. २०१८ सालमा इमानसिङ चेम्जोङले 'किरात मुन्धुम (किरातको वेद)' भनेर मुन्धुमी पुस्तक प्रकाशित गरे ।

बैरागी काइँला(तिल विक्रम नेम्बाङ)ले ०५२ सालमा तत्कालीन राजकीय प्रज्ञा प्रतिष्ठानबाट 'तङ्सिङ तक्मा मुन्धुमः आख्यान र अनुष्ठान' पुस्तक निकाले । सोही वर्ष हरि चोङ्बाङ (सेनछेनहाङ) लेपनि 'किरात ऐतिहासिक दर्पणः धर्म मुन्धुमको संक्षिप्त वर्णन भाग-१' मार्फत याक्थुङ मुन्धुमभित्रका महत्वपूर्ण वर्णन लेखे । त्यसयता धेरैले आफ्नै तरिकाले मुन्धुम संकलन गरेर पुस्तकको रुपमा निकालेका छन् । तर कसैले पनि ती मुन्धुमभित्रका अनेक महिला र पुरुष पात्रहरुले जीवन यापन गरेको स्थलहरुलाई भने पहिचान गर्न र विश्लेषण गर्न भ्याएनन् ।

क्रमश......

# सञ्चारकर्मी सुरेश रजकलाई शहिद घोषणा गर्न माग



काठमाडौं । नेवाः पत्रकार राष्ट्रिय दबूले राजावादीको प्रदर्शनमा मारिएका सञ्चारकर्मी सुरेश रजकलाई शहिद घोषणा र पीडित परिवारलाई उचित क्षतिपूर्ति दिलाउन सरकार समक्ष माग गरेका छन् । सञ्चारगृहमाथि भएको आक्रमण र सञ्चारकर्मी मारिएको विरोधमा दबूले आईतबार वसन्तपुरस्थित महादेव पावर्ती डबलीमा धर्ना दिई सो माग गरेका हुन् ।

धर्नामा विभिन्न वक्ताहरुले राजावादीको कथित आन्दोलनको नाउँमा तीनकुनेमा भएको अराजक तथा हिंसात्मक गतिविधिमा सञ्चारकर्मी मर्ने र सञ्चारगृहमाथि आक्रमण हुँदा पनि गृह प्रशासन जिम्मेवार तवरले पेश नभएकोमा आलोचना समेत गरेका थिए । घटनाको उचित छानबिनका लागि उच्चस्तरीय आयोग गठन गर्नुपर्ने पनि उनीहरुको माग रहेको छ ।

सो अवसरमा नेवाः पत्रकार राष्ट्रिय दबूका केन्द्रीय अध्यक्ष नृपेन्द्रलाल श्रेष्ठले प्रदर्शनमा भएको अराजक गतिविधिको निन्दा गर्दै सञ्चार गृह र सञ्चारकर्मी मारिएकोमा निकै दुःख व्यक्त गरे । सञ्चारकर्मी रजक समाचार संकलनको क्रममा मारिएकोमा उनलाई शहिद घोषणा गर्न माग गर्दै अध्यक्ष श्रेष्ठले सो माग पुरा नभएसम्म चरणबद्ध आन्दोलनमा उत्रिने चेतावनी दिए । नेपाल आदिवासी जनजाति पत्रकार महासंघ (फोनिज) का महासचिव समिर बलामीले जुनसुकै आन्दोलनको निशाना आदिवासी जनजाति भएको उल्लेख गर्दै सरकार चैत्र १५ गते भएको प्रदर्शनमा मृत्यु हुनेलाई शहिद घोषणा र प्रति परिवारप्रति संवेदनशील भई परिवारप्रति उचित क्षतिपूर्ति दिन माग गरे । उनले पत्रकार मारिएको विषयमा गृह मन्त्रालय जवाफदेही बन्न पनि आग्रह गरे । धर्नामा मिडिया एलाईन्सका अध्यक्ष भाष्करराज राजकर्णिकारले सञ्चारकर्मी सुरेश रजक मारिएकोमा दुःख व्यक्त गर्दै यस विषयमा सरकारले सत्यतथ्य बाहिर ल्याउन निष्पक्ष छानबिन आयोग गठन गर्न माग गरे । सरकारले सञ्चारकर्मी सुरेश रजकलाई तीन दिन भित्र शहिद घोषणा नगरे सरकार विरुद्ध कडा रुपमा प्रस्तुत हुने पनि अध्यक्ष राजकर्णिकारको भनाई रहेको छ ।

मधेशी पत्रकार समाजका अध्यक्ष मोहन सिंहले शुक्रबारको तीनकुनेमा भएको घटनामा सरकार मुकदर्शक बनेको आरोप लगाउँदै सरकारले घटना लुकाउन खोजेको भन्दै त्यसको सत्यतथ्य बाहिर ल्याउन न्यायिक छानबिन समिति गठन गर्न माग गरे । मृतक सञ्चारकर्मीका परिवारको तर्फबाट राजेन्द्र रजकले तीनकुनेको घटना सरकार आफ्नो न्युनत्तम दायित्वबाट वञ्चित भएर घटनाको तथ्य बंग्याउन खोजेको बताउँदै पीडित परिवारप्रति उचित क्षँतिपूर्ति प्रदान गर्न माग गरे । सो अवसरमा पत्रकार राष्ट्रिय दबूका वरिष्ठ उपाध्यक्ष सुनील महर्जनले निरंकुश सत्ताको निशाना सञ्चारगृह र सञ्चारकर्मी हुने तथ्य कुनै नौलो भएको सन्दर्भ जोड्दै घटनामा अनेक प्रश्नहरु अनुत्तरित रहेकोले त्यसलाई बाहिर ल्याउन बलियो आयोग गठन गर्न माग गरे । गृहप्रशासनले आन्दोलनमा मारिने सविन महर्जन र सञ्चारकर्मी रजक परिवारसमक्ष पुगेर पीडित परिवारप्रति मल्हम लगाउने र क्षतिपूर्ति दिन प्रतिबद्धता देखाउने काम नगरेको पनि उनको भनाई थियो ।

## समाजवादी..

सार्वजनिक सम्पत्तिमा आक्रमण भएन । न त कुनै घर र पसलमा क्षति नै भयो । सबै स्थानको र्‍यालीमा अगुवा-पछुवा प्रहरी परिचालन गरे पनि प्रहरीलाई दुःख दिएनन् । यति मात्रै होइन, भृकुटीमण्डपमा कार्यक्रम गर्न अनुमति पाएको मोर्चाले त्यहीँ कार्यक्रम अन्त्य गरेको गृहमन्त्रालयले जनाएको छ । संविधानले नै दिएको अधिकार उपयोग गर्दै सभा गरिएको नेपाल समाजवादी पार्टी नेसपाका नेता गंगालाल श्रेष्ठ बताउँछन् । ‘ हामीले संविधानको परिधिभित्र रहेर सभा गरेका हौं । हाम्रो मनसाय गलत थिएन । जनता र नागरिकलाई संयमित बनाउने हो,’ श्रेष्ठले भने, ‘राजनीतिक दलले आफ्ना गतिविधि शान्तिपूर्ण गर्छन् । यो कुरा जनतालाई थाहा छ । तर केही अराजकले शुक्रबार नै सडकलाई अशान्त बनाए । यसमा हाम्रो आपत्ति छ ।’

उनी शुक्रबार तीनकुनेमा भएको दुई व्यक्तिको हत्याले देशमा पूर्वराजाको नाममा अराजकता बढ्न गएकाले यसबारे सरकारले गम्भीर निर्णय गर्ने बेला भएको बताउँछन् । कार्यक्रम सकिनेबित्तिकै युवा नेता र विद्यार्थी नेता मिलेर सडकको फोहोर टिपेका थिए । यसबारे छलफल सुरुमै भएको एकीकृत समाजवादीका युवा नेता कृष्ण विके बताउँछन् । उनका अनुसार सफाइका लागि चारवटा पार्टीबाट १ सय ५० जनाका दरले युवा र ५० जनाका दरले विद्यार्थी परिचालन भए । ‘हामीले गरेको फोहोर आफैं सफा गर्ने भनिएको थियो’, विकेले भने, ‘ कार्यक्रम सकिनेबित्तिकै खटिएका थियौँ । हो-हल्ला र अराजकता पनि हुन दिएनौँ ।’

नेकपा नेता खड्काबहादुर विश्वकर्मा प्रकाण्डले कार्यक्रम सञ्चालन गरेको कार्यक्रममा प्रचण्डले अहिलेको व्यवस्थाको विकल्प यसमै खोज्नुपर्ने बताए । उनले सडकमा भएको राजावादीका गतिविधिलाई अराजकको संज्ञा दिए । नेपालीले सङ्घीय गणतन्त्रको भन्दा दायाँबायाँ गर्न नसक्ने उनको तर्क थियो । उनले पूर्वराजालाई ठेगानमा बस्न आग्रह गरे ।

गणतन्त्रबाट आएका उपलब्धिबारे पनि उनले जनतालाई सुसूचित गराए । प्रचण्डले राजावादीको गतिविधिलाई मण्डले अराजकताको संज्ञा दिए । सभालाई सम्बोधन गर्दै प्रचण्डले भनेका थिए, ‘मण्डले अराजकताको पराकाष्ठा भएको छ । घरमा आगो लगाएका छन् मण्डलेहरूले, पुलिसलाई आक्रमण गरेका छन् ।’ ‘एक दुईजना मरुन् भन्ने चाहेका छन् । त्यो राजावादीको चरित्र हो । जनयुद्धको नेतृत्वकर्ता, शान्ति सम्झौता, गणतन्त्र घोषणा र संविधान निर्माणको नेताको हैसियतले देशभरका जनतालाई भन्न चाहन्छु, केही त्रुटि भएका छन्’, उनले अगाडि भने, ‘ गणतन्त्रवादीले कमजोरी गरेकैले दलाल, नोकरशाहीले पनि लाभ लिने अवसर पाए । अब त्यसलाई सँच्याइनेछ ।’

एकीकृत समाजवादीका अध्यक्ष माधव नेपालले पनि प्रचण्डले जस्तै देशमा अराजक क्रियाकलाप हुन नदिन जनता जाग्ने बोला आएको बताए । उनले सरकारले कार्यशैली सुधार्नुपर्ने बताए । अध्यक्ष नेपालले समाजवादी मोर्चाको सभा र लहर कास्टिङमात्रै भएको बताए । उनले प्रतिगामीलाई होसियार रहन आग्रह गर्दै मुलुक शाहीवंशतर्फ फर्किन नसक्ने बताए ।

‘आजको कार्यक्रम नेपालको राजनीतिमा कास्टिङमात्रै हो । प्रतिगामी शक्तिहरू होसियार, अब यो मुलुक शाहीबंशतर्फ फर्किन सक्दैन,’ अध्यक्ष नेपालले भने, ‘अब यो मुलुक राणातन्त्रतर्फ फर्किन सक्दैन । अब यो मुलुक वंश र परिवारको शासनतर्फ फर्किन सक्दैन ।’

विप्लवले पनि नेपाली जनताले ठूलो त्याग र बलिदान गरेर ल्याएको गणतन्त्रमा पूर्वराजा र राजावादी झुन्डले आँखा गाडेको बताउँदै यो व्यवस्थालाई धमिलो नबनाउन आग्रह गरे । उनले नेपालमा प्रभुहरूको खाँचो नभएको बताएका थिए । पैतलामुनि जनतालाई धुलोसरी गर्न नहुने, सामन्तवादी हैकम चलाउने प्रवृत्ति र शासकहरू खाँचो नभएको उनले बताए ।

‘हामी यो मैदानबाट चुनौती दिन चाहन्छौँ, भन्न चाहन्छौँ हामीलाई प्रभुहरूको खाँचो छैन ।

बाँकी पेज ७ मा



**सूचना**

**सडक हामी सबैको साझा सम्पत्ति हो । सडक निर्माणमा तपाई हाम्रो ठूलो धनराशी खर्च भएको हुन्छ । त्यसैले यसको संरक्षण एवं सम्वर्द्धन गर्नु हामी सबैको दायित्व हो । निर्माण भैसकेको सडकका विभिन्न खण्डमा अनाधिकृत रुपमा सडक सिमा अतिक्रमण गरी घरटहरा निर्माण गर्ने, होडिङ्ग बोर्ड राख्ने, सडकमा सामाग्री थुपार्ने, सवारी साधन धुने-पखाल्ने, पार्किङ गर्ने, सडकको नाली पुरी बाटो बनाउने तथा नालीमा ढल मिसाउने एवं फोहरमैला फाल्नेजस्ता कार्यका कारण सडक संरचना, सवारी आवागमन तथा वरीपरिको वातावरणमा समेत प्रतिकुल असर पर्ने हुनाले उपरोक्त कुनै पनि क्रियाकलापहरु नगर्न नगराउन हुन सम्वन्धित सबैसँग यस डिभिजन सडक कार्यालय हार्दिक अनुरोध गर्दछ ।**

डिभिजन प्रमुख
**डिभिजन सडक कार्यालय**


# चीनमा नयाँ चमत्कार, क्यान्सरको उपचारमा सहज

काठमाडौं । क्यान्सर विश्वमै घातक रोगको रुपमा लिइन्छ, जसको उपचार प्रक्रिया महँगो र जटिल मानिन्छ । तर, चीनका वैज्ञानिकहरुले यस्तो प्रविधि विकास गरेका छन्, जसले क्यान्सरको उपचार सहज हुने भएको छ । चिनियाँ वैज्ञानिकले ‘अन्कोलाइटिक भाइरस थेरापी’ नामक प्रविधिमा आधारित रहेर उपचार पद्तीको विकास गरेका हुन् । यो प्रविधिले खतरनाक क्यान्सर ट्यूमरलाई हटाउने र शरीरको रोग प्रतिरोधात्मक क्षमतालाई पनि सक्रिय गर्ने दाबी गरिएको छ ।

वैज्ञानिकहरूले यी भाइरसलाई यसरी विकसित गरेका छन् कि तिनीहरू सिधै क्यान्सर कोशिकाहरूमा प्रवेश गर्छन्, त्यहाँ तिनीहरूको संख्या बढाउँछन् र अन्ततः क्यान्सर कोशिकाहरूलाई नष्ट गर्छन् । यति मात्र होइन, यी भाइरसहरूले शरीरको प्रतिरक्षा प्रणालीलाई क्यान्सरका बाँकी रहेका कोशिकाहरूलाई नष्ट गर्न मद्दत गर्ने प्रोटिनहरू पनि निकाल्न सक्षम देखिएको छ ।

यो प्रविधि नयाँ भने होइन । ओन्कोलाइटिक भाइरसहरूमा अनुसन्धान लगभग १०० वर्ष पहिले नै सुरु भएको हो तर हालैका वर्षहरूमा आनुवंशिक इन्जिनियरिङका कारण यसको क्षमतामा उल्लेखनीय सुधार आएको छ । हालसम्म यो प्रविधि अमेरिका, जापानलगायत विश्वका केही देशले अपनाइ नै सकेका छन् । तर, चीनले यस क्षेत्रमा तीव्र विकास गरिरहेको छ ।

त्यहाँ करिब ६० क्लिनिकल ट्रायल भइरहेका छन्, जसबाट यो उपचार सर्वसाधारणका लागि सुलभ र सस्तो हुने अपेक्षा गरिएको छ । यो अनुसन्धान दक्षिण चीनको गुआङ्सी मेडिकल युनिभर्सिटीका प्रोफेसर झाओ योङक्सियाङको नेतृत्वमा गरिएको हो ।

ओन्कोलाइटिक भाइरस थेरापीको सबैभन्दा ठूलो विशेषता यसको कम लागत हो । हालसम्म क्यान्सरको उपचारमा प्रयोग हुने सीआरटी थेरापीको चीनमा प्रति डोज १ लाख ४० हजार अमेरिकी डलर खर्च हुने गरेको छ ।

यसको तुलनामा, अनकोलाइटिक भाइरस थेरापीको इन्जेक्सन मात्र १४० अमेरिकी डलर अर्थात नेपाली १९ हजार रूपैयाँमा नै उपलब्ध हुन सक्छ, यो थेरापीको एक वर्षको लागि कुल लागत ४,२०० अमेरिकी डलरसम्म हुन सक्छ, जुन हालको क्यान्सर उपचारको तुलनामा निकै किफायती छ ।

# नेवार समुदायको दोस्रो ठूलो पर्व पाहाँचह्रे



काठमाडौं । काठमडौं उपत्यकाका नेवार समुदायले दसैंपछिको ठूलो पर्वका रूपमा मनाउने पाहाँचह्रे पर्व देशभर छरिएर रहेका संस्थाका प्रतिनिधिले विभिन्न कार्यक्रम गरी देशभरा मनाउँदै छन् ।

यसलाई पासाचह्रे पनि भन्दछन् । नेवार भाषामा पाहाँको अर्थ पाहुना हो भने पासाको अर्थ साथी । चह्रे चन्द्रमासको भित्तेपात्रोअनुसार चौधौँ दिनलाई भनिन्छ । यस चाडका दिन खाइने मुख्य खाद्यवस्तु लसुन भएकाले कसैकसैले यसलाई ‘लसुने चाड’ पनि भन्ने गरेको संस्कृतिविद्को भनाइ छ ।

यो चाडलाई काठमाडौंमा नेवार सम्प्रदायले दसैं र तिहारजस्तै मनाउँदै आएको बताइन्छ । यस दिन बालबालिका, युवायुवती, वृद्धवृद्धा बिहानै सूर्योदयभन्दा अघि उठी मध्याह्नसम्म हर्षोल्लासका साथ भद्रकाली, रक्तकाली, श्वेतकाली, कङ्केश्वरी आदि पीठका देवी, भैरव, गणेश आदि देवताको दर्शन तथा पूजा गर्छन् । मानिसहरूले दिउँसोदेखि बेलुकीसम्म आआफ्ना घरमा परिवारसँग बसी विविध प्रकारका खानेकुरा खान्छन् ।

पाँहाचह्रेका दिन मुख्यतया समयबजी खाइन्छ । यसमा चिउरा, बोडी, अन्डा, बारा, साग, अचार, आलु, माछा, भटमासलगायत परिकार खाइन्छ । “विभिन्न स्थानमा अन्य देवीदेवताको खट जात्रा गरी पाँहाचह्रे पर्व मनाउने चलन छ ।” “यस पर्वको पहिलो दिन बिहान विभिन्न शक्तिपीठमा पूजा गरी बेलुकी भष्मासुरको डरले लुकेर बसेका महादेवको पूजा गरिन्छ ।” लुकु महाद्यः भन्दै महादेवको एउटा आकृतिलाई जमिनमुनि लुकाएर पूजा गर्ने परम्परा छ ।” घरघरमा खाल्टोमा राखिएका महादेवलाई लसुन, मुलाको पहेँलो र सेतो फूल राखेर पूजा गर्ने गरिन्छ ।

यस अवसरमा कङ्केश्वरीदेवीलगायत विभिन्न शक्तिपीठ देवदेवीका मूर्तिको खटजात्रा गर्ने परम्परा छ । पाहाँचह्रे पर्वको दोस्रो दिन अर्थात् घोडेजात्राका दिन दुई वर्षसम्मका बालबालिकालाई मरःजा खुवाइन्छ । चौरासी व्यञ्जनसहितको उक्त परिकार खुवाउँदा बालबालिका निरोगी हुने र भूतप्रेतले नसताउने जनविश्वास छ ।

पाहाँचह्रेको अन्तिम दिन आइतबार दिउँसो असनमा देवीको खट जुधाउने जात्रा गरिन्छ । रातो, नीलो र पहेँलो गरी तीनवटा रङका टोपी र टिसर्ट लगाएकाहरू असनको मुख्य चोकमा भेला हुन्छन् । भद्रकाली (लुँमरी अजिमा) र कङ्केश्वरी (चामुण्डार कङ्ग अजिमां)को खट बोक्नेहरूले चिराग साट्ने गर्छन् । यसलाई स्थानीय भाषामा ‘द्य ल्वाकेगु’ भनिन्छ । पहिले असनमा सात खट जात्रा गरी ‘द्य ल्वाकेगु’ जात्रा हुने गरे पनि पछिल्लो समय दुई देवीको मात्र जात्रा हुने गरेको छ । खट तीनवटा भए पनि दुईवटा खट भद्रकाली (लुँमरी अजिमा) र एउटा खट कङ्केश्वरी (चामुण्डार कङ्ग अजिमा) को हुन्छ । ‘असनमा खट जुधाउने भनिए पनि खट नै जुधाइँदैन । रातो, नीलो र पहेँलो गरी तीनवटा रङका टोपी र टिसर्ट लगाएकाहरू असनको मुख्य चोकमा भेला हुन्छन् ।

# राज्य र आन्दोलनकारी दुवै तर्फबाट लोकतन्त्रको उपहास !

● उमङ्ग जङ्ग शाह

लोकतन्त्रमा वैकल्पिक विचारलाई सधैं ठाउँ रहन्छ। आफ्नो अभिव्यक्ति मार्फत सम्पूर्ण नागरिकले आफ्ना विचारलाई प्रकट गर्न पाउनुपर्छ। शान्तिपूर्ण रूपमा विरोध प्रदर्शन गर्न पाउनुपर्छ। पछिल्लो दुई चार दिनमा यस्ता कुनै पनि लोकतान्त्रिक मूल्य मान्यताको कदर गरिएको देखिएन। आन्दोलनकारी उग्रवादी र सरकार दमनकारी भूमिकामा देखियो। लोकतान्त्रिक मूल्य मान्यतालाई तिलाञ्जली दिँदै पाखुरी बलमा सबै अल्झिएको देखियो। कालो र सेतो धारणाको पछि नलागि सुशासनको कामना गर्ने हो भने तलका बुँदाहरुमा ध्यान जान आवश्यक छ।

१) लोकतान्त्रिक अभ्यास चुनाव र सरकार बनाएर मात्र पूर्ण हुँदैन बरु "डिलेबिरेटिभ डेमोक्रेसी" अर्थात् विचारशील लोकतन्त्रको प्रयासबाट मात्र सफल हुन सक्छ। बहुसंख्य वादले मात्र लोकतन्त्र पुरा हुदैन यसको पूर्णताको लागि बहुलवाद नभई हुदैन। समावेशिताको आवस्यकतालाई महत्व दिँदै कुनै पनि निर्णयले प्रभावित हुने जनसङ्ख्याले उक्त निर्णयमा छलफल गर्ने मौका पर्याप्त पाउनुपर्दछ। विडंबना सरकार पक्षले जनताका आवाजलाई प्रतिगामी शक्तिको संज्ञा दिँदै त्यो आवाज विरुद्ध नै शक्ति प्रदर्शन गर्ने निर्णय लियो। हामी त्योभन्दा बढी मानिस ल्याउँछौं भनेको के हो ? नेपाली जनतालाई तर्साउन नेपाली जनता ल्याउँछु भनेको ? व्यवस्थामाथि प्रश्न जनस्तरबाट उठ्छ भने जनताको फ्रस्ट्रेसन बुझी समर्थन प्राप्त गर्ने बाटोतिर लाग्नुपर्ने होइन र ? लोकतान्त्रिक व्यवस्थामा आफ्नै देशको नागरिक शत्रु हुनै सक्दैन। निरङ्कुशतामा मात्र त्यो सम्भव छ। राज्यपक्ष लोकतान्त्रिक व्यवस्थाका हिमाइतीहरूको यो कदम सरासर गलत हो।

२) आफ्नो धर्म संस्कृतिको प्रवर्द्धन गर्न पाउनु उन्नत लोकतान्त्रिक व्यवस्थाको बहुमूल्य उपहार हो। लोकतान्त्रिक व्यवस्था अनुसार विरोधसभा छलफल जेसुकै गरेर पनि आ-आफ्ना मूल्य मान्यतालाई जोगाउन लोकतान्त्रिक व्यवस्थाले अवसर दिएको छ। कुनै पनि समुदायको मूल्य मान्यतालाई बाहिरी शक्तिबाट रक्षा गर्ने र आन्तरिक दमनलाई निष्क्रिय पार्दै लाने लोकतन्त्रको स्वभाव हो। अर्थात् कुनै व्यक्तिलाई उसको धर्म संस्कृति जबरजस्ती बोकेर हिँड्नुपर्छ भन्ने कुरामा लोकतान्त्रिक व्यवस्थाले समर्थन गर्दैन तर कुनै पनि व्यक्ति समूहको संस्कृति धर्म आदिलाई बाह्य शक्तिले नकारात्मक प्रभाव पार्दछ भने लोकतान्त्रिक व्यवस्थाले त्यस कार्यलाई रोक्दछ र कुनै पनि समुदायको मूल्य मान्यतालाई प्रवर्द्धन गर्न सहयोग गर्दछ। यस्तो अवस्थामा व्यवस्था माथि नै प्रश्न उठाउँदै गर्दा लोकतान्त्रिक व्यवस्थाको गुणहरूलाई उपयोग गर्न बाट आन्दोलनरत समूह चुकेको देखिन्छ ।

३) आन्दोलनका क्रममा राष्ट्रिय गान बजाई कार्यक्रम गर्दै गर्दाको अवस्थामा अश्रु ग्यास प्रहार गरी राज्य पक्षले शान्तिपूर्ण आन्दोलनलाई प्रभावित पारेको यथेष्ट प्रमाणहरू सामाजिक सञ्जालमा छाएका छन्। शान्तिपूर्ण रूपमा भइरहेको कार्यक्रममा अश्रु ग्याँस प्रहार गरी प्रदर्शन रोक्नु लोकतान्त्रिक पद्धति हुँदै होइन। तँ अलोकतान्त्रिक होस् त्यही भएर तलाई अलोकतान्त्रिक व्यवहार गर्छु भनेर लोकतान्त्रिक व्यवस्थाले भन्न पाउँदैन त्यो पनि राष्ट्रिय गान बजिरहेको बेला।

४) व्यक्तिको सामाजिक करार राज्यसँग हो। कुनै पनि राज्यको नागरिकले आफ्ना हक अधिकार जीवन आदिको संरक्षण को दायित्व राज्यलाई सुम्पन्छ र असल नागरिकको भूमिका उक्त राज्यमा रही निर्वाह गर्दछ। यी करारलाई पूर्णरूपमा पालना राज्यले गर्दैन भने नागरिकले विरोध प्रदर्शन गर्न पाउनुपर्छ। तर उक्त विरोधले अन्य नागरिकको स्वतन्त्रतालाई हनन गर्दछ भने त्यो व्यक्तिका स्वतन्त्रता माथिको अन्याय साबित हुन्छ। व्यक्ति सङ्घ संस्थाले नराम्रै गरेको भए पनि त्यस उपर कारबाही गर्न राज्य सत्तालाई दबाब दिने हो। आन्दोलनकारीहरू बाट व्यक्तिगत सम्पत्ति, उद्योग, र सञ्चारमाध्यम माथि आक्रमण हुनु अत्यन्तै निन्दनीय कुरा हो।

५) व्यक्तिहरूको निजी सम्पत्ति ज्यानधन आदिको रक्षा गर्नु राज्यको प्रथम दायित्व हो। प्रदर्शनको क्रममा राज्यका नागरिकहरूको जीवनमाथि असर पर्न नदिन राज्यले संवेदनशील रूपमा आफ्नो भूमिका निर्वाह गर्नुपर्दछ। प्रदर्शनकारीहरूलाई निजी सम्पत्ति र जनजीवन बाट पर राखी हुनसक्ने विध्वंसबाट जोगाउनुपर्छ। तर आन्दोलनका क्रममा सरकारपक्ष बाट नै निजी भवन प्रयोग गरी अश्रु ग्याँस प्रहार गरेको सामाजिक सञ्जालमा यत्रतत्र देखिन्छन् भने स्थानीयहरूले समेत ती कुराहरूलाई पुष्टि गरिरहेका छन्। आक्रोशित भिडलाई निजी सम्पत्तिबाट टाढा डाइभर्ट गर्नुको साटो निजी सम्पत्ति तिर नै आकर्षित गराउने प्रशासनको भूमिका अत्यन्त गैर जिम्मेवारीपूर्ण देखिन्छ। त्यसपछिको सिलसिला सर्वविधितै छ।

६) आक्रोश आन्दोलनको विविध प्रकृतिमध्यको एक हो। आन्दोलनको नेतृत्व लिनेहरूले आक्रोशित आफ्ना समूहलाई संयम राख्न र सन्तुलन कायम गर्न सघाउनुपर्ने हो। नेतृत्व त्यसैको लागि आवश्यक हुन्छ। तर यस आन्दोलनका क्रममा नेतृत्वमा रहेका व्यक्तिले जबर जस्ती बाहुबली शक्ति देखाउँदै मानव विरुद्ध यन्त्र प्रयोग गरी सुरक्षा घेरा तोड्ने जस्ता कार्य गरेर अनावश्यक नजिर बसाल्दै समूहको आक्रोशलाई झनै उत्तेजित तुल्याएको प्रष्ट देखिन्थ्यो। यसले लोकतान्त्रिक विधिबाट विरोध प्रदर्शन गर्ने चरित्रलाई पक्कै बयान गर्न सक्दैन। यो आन्दोलनका नेतृत्वबाट साह्रै गैर जिम्मेवारीपूर्ण कार्य रह्यो।

७) राज्यपक्षका हिमायती मूलधारका केही ठूला प्रभावशाली मिडियाहरूको एकोहोरो आन्दोलनकारीको विरुद्धमा समाचार सम्प्रेक्षण गर्ने प्रवृत्तिले बहुलवादको उपहास गर्दै इलिट मोडललाई अपनाइएको झल्को दिन्थ्यो। ठूला शक्ति मिली समाजको दिशा निर्धारित गरेजस्तो। निजी घरमा आक्रमण भएको प्रशस्त समाचार आउँदा त्यस घरलाई प्रयोग गरी अश्रु ग्यास प्रहार गरिएको भन्ने जन आवाजलाई सेन्सर गरियो। सामाजिक सञ्जालमा देखिएका कुरा र मूलधारका मिडियाले भनेको कुरा मेल नखाने देखिन्थ्यो। निजी घरलाई प्रहरीले किन प्रयोग गर्यो भन्ने प्रश्न कतैबाट सुनिएन न नै ती प्रहरी नै थिए कि थिएनन् भन्ने प्रश्न ? सामाजिक सञ्जालमा त्यही मिडियाकर्मीको अगाडि स्थानीयले वास्तविक घटना बताइरहेको देखिन्थ्यो तर मूलधारका मिडियामा ती कुराले ठाउँ पाएनन् बरु एकहोरो आन्दोलनकारीलाई अपराधीको संज्ञा समेत दिन पछि परेनन् । राज्यको कार्यदेखि निराश भई आन्दोलनमा होमिएका नेपाली नागरिकहरु हिंसात्मक समूह हुन्छ ? व्यवस्था उपर तिनको भरोसा कायम गराउने दायित्व राज्य, राज्य संयन्त्र र राज्यका अङ्गहरूको होइन ? लोकतान्त्रिक व्यवस्थामा लोकतन्त्र माथिनै प्रश्न उठेपनि त्यो लोकतान्त्रिक पद्धतिभित्रै पर्छ भन्ने कुरा नबुझेका हुन् त यी मिडियाहरूले ? यस्ता विषयमा एक पक्ष भएर समीक्षा गर्दा त्यो लोकतान्त्रिक व्यवस्थाको संरक्षणमा देखिए पनि अलोकतान्त्रिक हुन्छ भन्ने कुरा बुझेका छन् कि छैनन् ? यसरी लोकतान्त्रिक व्यवस्था कसरी गहिराईमा पुग्दछ ? के हामी सधैं संक्रमणकालीन लोकतन्त्रमा नै अल्झिएर बस्ने? राज्यको चौथो अङ्गले लोकतान्त्रिक संस्कृतिलाई प्रगाढ बनाउन महत्वपूर्ण भूमिका निर्वाह गर्नुपर्दछ।

८) आन्दोलनका क्रममा आन्दोलनकारी मध्यका या जो सुकैले लुटपाट एवं आगजनीका घटनाहरू गराए त्यो साह्रै निन्दनीय छ र नेतृत्वको भूमिका साह्रै फितलो र संरचनाको अभाव प्रष्ट देखिन्छ। संस्थागत आन्दोलन भनिएता पनि संस्थालाई पूर्णता दिने संरचना देखिएन। कुनै पनि प्रभावशाली संरचनालाई पुष्टि गर्ने पक्षहरू जस्तै उपयुक्त योजना, समन्वय, तथा रणनीतिहरू आन्दोलनका क्रममा देखिएनन् जसले आन्दोलनलाई अनियन्त्रित र अराजक बनायो। मिडिया, गोष्ठी समारोहमा लक्ष्य र रणनीतिका कुरा गर्ने नेतृत्वमा रहेका व्यक्तिहरूको स्थलगत कार्यक्षमता स्तरहीन देखियो।

९) सुरक्षा संयन्त्रको फितलो र गैर जिम्मेवारी पूर्ण उपस्थिति अप्रिय घटनाका अनेक कारणहरूमध्ये एक संवेदनशील कारण रह्यो। सुरक्षा संयन्त्र जनधनका सुरक्षाका लागि सधैं तत्पर रहनुपर्दछ। कुनै पनि घटनालाई पूर्व आंकलन गर्दा "वर्स्ट केस सिनेरियो" अर्थात निम्तन सक्ने विषम परिस्थितिलाई ध्यानमा राख्नु पर्ने हो। तर खटाइएको प्रहरीको सङ्ख्या र स्थलगत उपस्थितिले गैर जिम्मेवारीपनको पराकाष्टलाई उजागर गरेको छ। सुरक्षा निकाय थोरै सङ्ख्या भन्दै जिम्मेवारीबाट पन्छिएको देखिन्छ। सुरक्षा व्यवस्थापन को उचित तयारी संविधानले दिएको स्थानिय, आन्दोलनकर्ता, स्वयं सुरक्षा संयन्त्र वा अन्य व्यक्तिहरूको ज्यान धनको सुरक्षाको अधिकारको लागि मात्र होइन आन्दोलन गर्न पाउने अधिकार को सुनिश्चितताको लागि समेत अत्यावश्यक हुन्छ। यही फितलो अभ्यासका कारण सेनालाई समेत आन्दोलन स्थलमा उतार्नुपर्ने आवश्यकता निर्माण भयो जुन लोकतान्त्रिक अभ्यासको लागि राम्रो नजिर पक्कै होइन। अर्कोतिर डेट एक्सपायर भएका टियर ग्याँस को समेत प्रयोग गरी नेपाली नागरिकको स्वस्थ रहन पाउने अधिकारमाथि नै खेलवाड गरिएको देखियो जुन जति निन्दा गरेपनि कम हुन्छ। आफ्ना जवानहरूलाई आन्दोलनकारी बाट घेरिने गरी संवेदनशील अवस्थामा छोड्ने र हतियार नबोकेका नेपाली नागरिकमाथि के आधारमा गोली चलाइयो भन्ने प्रश्न लोकतान्त्रिक व्यवस्थामा पक्कै महत्वपूर्ण रूपमा लिइने छ भन्ने आश गरौं। आगलागि भएको भवनमा फसेका पत्रकारको उद्धार गर्न सहकर्मीहरूले बारम्बार आग्रह गर्दा समेत उदासीनता देखाएको भनिएको विषय पनि उत्ति नै गम्भीर छ ।

१०) आन्दोलनकारीहरूमा राजनीतिक चेतना देखिएन। हामीले कुन लक्ष्य प्राप्ति गर्नका लागि आन्दोलन गरिरहेका छौं। हाम्रा परिधिहरू कहाँ सम्म छन् र त्यसलाई नाघ्दा परि स्थिति के सम्म हुन सक्छ भन्ने कुराको हेक्का सर्वसाधारण आन्दोलनकारीहरूले राखेको देखिएन। आस्था आफ्नो ठाउँमा छ तर राजनीतिक चेतना बिना लोकतान्त्रिक अभ्यास हुन सक्दैन। अलिकति उत्तेजित हुन नपाउँदै ढुङ्गामुढा गर्ने र तोडफोडमा लाग्ने प्रवृत्ति हावी भएको देखियो। सरकारी गाडी जलाउने आदिको नजिर त प्रभावशाली पार्टीहरूले नै बसालेका छन् त्यो पनि अलोकतान्त्रिक नै हो तर यहाँ निजी स्टोर समेत लुटिएको घटना आउँदै गर्दा , पार्टी अफिस तोडिएको घटना सार्वजनिक हुँदै गर्दा, राजनीतिक संस्कृतिको अभ्यासको अवस्था निकै फितलो रहेको देखिन्छ। आन्दोलनका नेतृत्व गर्नेहरूका उग्र भाषण र सत्तापक्षले नै बारम्बार होच्याउने प्रवृत्तिले यी आन्दोलनकारीहरूलाई उग्र बनाएको देखिन्छ । संयमता नै लोकतन्त्रको आधार हो। उग्रवाद हावी हुनासाथ लोकतन्त्र खतरामा पर्छ। अति उग्रवादले अराजकता समेत निम्त्याएको इतिहासमा धेरै प्रमाणहरू छन्।

समग्रमा भन्नुपर्दा लोकतन्त्रका धेरै किसिमहरू छन्। इतिहासले यसको विकासलाई अनेक रुपरेखामा प्रमाणित गरेको छ। तपाईं कुन बिन्दुमा हुनुहुन्छ र कस्तो लोकतन्त्र अभ्यास गर्दै हुनुहुन्छ त्यो कुरा बुझ्न जरुरी छ। जुनसुकै अवस्थाको लोकतन्त्र भएपनि मानिसको ज्यान धन, आत्मसम्मान सहितको स्वतन्त्रता र समग्र मानव अधिकार बिना लोकतन्त्रको अभ्यास हुन सक्दैन। लोकतन्त्रमा आन्दोलन गर्न पाउनु लोकतान्त्रिक समाजको सुन्दर अभ्यास हो। सरकार पक्षले आन्दोलनलाई लोकतान्त्रिक विधिबाट अगाडि बढ्न सहयोग गर्नुपर्छ। आन्दोलन आफैमा पनि लोकतान्त्रिक विधिकै उपज हो। यसको प्रयासबाट लोकतान्त्रिक चेतना घट्ने होइन वृद्धि हुन्छ। आन्दोलनलाई नेतृत्व गर्नेहरूले पनि लोकतान्त्रिक व्यवस्थालाई सम्मान गर्दै यसको परिधि अर्थात् "मेरो स्वतन्त्रताको परिधि त्यहाँसम्म छ जहाँसम्म मैले अर्काको स्वतन्त्रता माथि हस्तक्षेप गर्दिन" भन्ने कुरा बुझी अगाडि बढ्दा उत्तम हुन्छ। एकअर्कालाई थिचोमिचो गर्ने होच्याउने र तताउने लोकतान्त्रिक अभ्यास होइन । सबैको विचारको सम्मान गरौं। लोकतान्त्रिक अभ्यासको प्रबर्धन गरौ, लोकतान्त्रिक निर्णयको आधार नेपाली नागरिकले नै कोर्ने छन्।

- प्रबर्धन अनलाइन

# जसले आईपीएल डेब्यु खेलमै लिए चार विकेट

काठमाडौं - जारी इन्डियन प्रिमियर लिग (आईपीएल)को डेब्यु खेलमा मुम्बई इन्डियन्सका आश्विनी कुमारले चार विकेट लिएका छन्। उनको उत्कृष्ट बलिङमा तेस्रो खेलमा मुम्बईले पहिलो जित दर्ता गरेको छ।

सोमबार राति कोलकता नाइट राइडर्सविरूद्धको खेलमा मुम्बई इन्डियन्सका देब्रेहाते तीव्र गतिका बलर अश्विनी कुमारले तीन ओभरमा मात्र २४ रन खर्चिएर चार विकेट लिएका हुन्। उनी आईपीएलको डेब्यु खेलमा चार विकेट लिने पहिलो भारतीय बलर बनेका छन्।

सोमबारको खेलमा डेब्यु गरेका उनले आईपीएलको आफ्नो पहिलो बलमै कोलकताका कप्तान अजिन्का राहाणेको विकेट लिए। उनले कोलकताका कप्तान रहाणेसँगै रिंकु सिंह, मनिष पाण्डे र आन्द्रे रसेलको विकेट लिएका हुन्। तीन ओभर मात्र बलिङ गरेका उनले पाण्डे र रसेललाई बोल्ड आउट गरेका हुन्।

उनलाई मुम्बईले अक्सनमा ४० लाखमा आवद्ध गराएको हो। माहालीमा जन्मिएका उनी पछिल्लो समय घरेलु क्रिकेटमा उत्कृष्ट बलिङ गरेर चर्चामा थिए।

२३ वर्ष २१५ दिनका आश्विनीको उत्कृष्ट बलिङमा मुम्बईले कोलकतालाई १६.२ ओभरमा ११६ रन बनाउँदा अलआउट गरेको थियो।

आश्विनीले ऐतिहासक बनाएको सोमबार भएको तेस्रो खेलमा कोलकाता नाइट राइडर्सलाई ४३ बल बाँकी हुँदा मुम्बईले ८ विकेटले हराउँदै पहिलो जित निकालेको हो।

कोलकाताले दिएको ११७ रनको लक्ष्य मुम्बईले १२.५ ओभरमा दुई विकेटको क्षतिमा पुरा गर्यो। मुम्बईका लागि ओपनर रायन रिकेल्टनले अविजित ६२ रन बनाए। ४१ बलको सामना गरेका उनले चार चौका र पाँच छक्का प्रहार गरे।

त्यस्तै सूर्यकुमार यादवले ९ बलमा तीन चौका र दुई छक्कासहित २७ रन बनाए। विल ज्याक्सले १६ रन बनाउँदा रोहित शर्मा १३ रनमै पेभेलियन फर्किएका थिए।

कोलकाताका लागि आन्द्रे रसेलले दुई विकेट लिए। २.५ ओभर बलिङ गरेका रसेलले ३५ रन खर्चिएका थिए।

त्यसअघि मुम्बईको वानखेडे रंगशालामा टस हारेर पहिले ब्याटिङ गरेको कोलकाता १६.२ ओभरमा अलआउट हुनुअघि ११६ रन बनाएको थियो। उसका लागि अंकृश रघुवंशीले सर्वाधिक २६ रन बनाए। त्यस्तै मनदीप सिंहले २२ रन, मनिष पाण्डेले १९ रन बनाउँदा रिंकु सिंह १७ रनमा आउट भए। मुम्बईका अश्वनी कुमारले चार विकेट लिएको खेलमा दीपक चहरले दुई तथा ट्रेन्ट बोल्ट र कप्तान हार्दिक पाण्ड्याले एकएक विकेट लिए।

# तेक्वान्दोमा तुलसी गुरुङ बने ९ डान प्राप्त गर्ने पहिलो नेपाली




काठमाडौं । तुलसी गुरुङ तेक्वान्दो खेलमा ९ डान प्राप्त गर्ने पहिलो नेपाली खेलाडी बनेका छन् । तेक्वान्दोमा यो नै सबैभन्दा माथिल्लो र अन्तिम उपाधि हो । गुरुङले गत वर्ष डिसेम्बरमा ९ डान प्राप्तिका लागि कोरियाको सियोलास्थित विश्व तेक्वान्दो महासंघमा प्रयोगात्मक र लिखित परीक्षा दिएका थिए । महासंघले सोमबार यसको नतिजा घोषणा गरेको हो । सो-सम्बन्धी प्रमाणपत्र यसवर्ष जुनमा आयोजना हुने कार्यक्रममा प्रदान गरिनेछ ।

ओलम्पियन दीपक विष्ट कुनै पनि नेपालीले हालसम्म ७ डानभन्दा माथि प्राप्त गर्न नसकेको बताउँछन् । ७ डान प्राप्त गरिसकेपछि ८ डानको लागि ७ वर्ष, ९ डानको लागि ८ वर्ष तेक्वान्दोमै निरन्तर क्रियाशील रहनुपर्नेसमेत उनले जनाए ।

यो उपाधि प्राप्त गर्नु अत्यन्तै कठिन छ । दुई दशकअघि देखि गुरुङसँग परिचित रहेको बताउने उनले यसले तेक्वान्दोप्रति समर्पित सम्पूर्ण खेलाडी र देशकै शिर उचो बनाएको बताए । यो उपाधि प्राप्त गर्ने व्यक्तिलाई संसारभर अत्यन्तै सम्मानजनकरूपमा ग्राण्डमास्टरका नामले सम्बोधन गरिन्छ ।

नेप्लिज तेक्वान्दो महासंघका अध्यक्ष दीपक खड्काले समेत तुलसी गुरुङबाहेक अरू कसैले ९ डान प्राप्त गरेको जानकारी नभएको बताए । ४०/४५ वर्ष निरन्तर तेक्वान्दोमै क्रियाशील रहेर शारीरिकरूपमा तन्दुरुस्त हुनुपर्ने भएकाले पनि यो प्राप्त गर्नु अत्यन्तै कठिन रहेको उनको भनाइ थियो ।

१७ वर्षको उमेरदेखि तेक्वान्दोमा सक्रिय गुरुङले ९ डान परीक्षा पास गर्न सफल भएकोमा खुसी व्यक्त गरे । ६३ वर्षका उनी हङकङमा बसोबासरत छन् । उनी हङकङ तेक्वान्दोका प्रमुख प्रशिक्षकसमेत रहिसकेका छन् । हङकङको खेलकुद इतिहासमा यो स्थान हासिल गर्ने गुरुङ पहिलो नेपाली हुन् । पूर्वब्रिटिस गोर्खा सैनिक उनी सन् १९८२ र १९८३ मा आयोजित ' हङकङ ओपन ब्ल्याक बेल्ट कम्पिटिसन' का स्वर्ण पदक विजेता हुन् ।

सन् १९८३ मा उनले हङकङको प्रतिनिधित्व गर्दै डेनमार्कको कोपनहेगनमा आयोजित 'वर्ल्ड तेक्वान्दो च्याम्पियनसिप' मा सहभागिता जनाएका थिए । ब्रिटिस सैनिक खेलाडीबीचको प्रतिस्पर्धामा सर्वोत्कृष्ट भएपछि उनलाई हङकङ ओपनमा भिड्ने अवसर जुरेको थियो । सन् १९९३ मा अमेरिकामा आयोजित विश्व तेक्वान्दो च्याम्पियनसिप र १९९५ थाइल्याण्डमा आयोजित इष्ट एसियन गेम्समा गुरुङ अफिसियल रेफ्री थिए । त्यसो त नेपाली खेलकुदमा समेत उनले इतिहास रचेका छन् ।

२०४० मा पोखरामा आयोजित दोस्रो राष्ट्रिय खेलकुदमा गुरुङले मार्सल आर्ट्सतर्फ स्वर्ण पदकसहित उत्कृष्ट फाइटरको उपाधि जितेका थिए । त्यतिबेला कराँतेका चर्चित खेलाडी मोहन राईलाई गुरुङले क्वाटरफाइनलमा पराजित गरेका थिए । सेनाबाट अवकाश लिइसकेपछि पनि उनी निरन्तर तेक्वान्दोमै सक्रिय रहे । सन् २००१ मा गुरुङले 'हङकङ नेप्लिज तेक्वान्दो महासंघ' दर्ता गरेका थिए । त्यसयता उनको प्रशिक्षणमा २ हजारभन्दा बढीले ब्ल्याक बेल्ट लिइसकेका छन् ।

## संसदको..

(पहिलो संशोधन) अध्यादेश, २०८१', 'आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व (पहिलो संशोधन) अध्यादेश, २०८१' र 'सहकारीसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१'लाई फागुन २१ गतेको बैठकले स्वीकृत गऱ्यो ।

'भूमिसम्बन्धी केही नेपाल ऐनलाई संशोधन गर्ने अध्यादेश, २०८१' मा सत्तारुढ दलहरू जनता समाजावदी पार्टी नेपाल र लोकतान्त्रिक समाजवादी पार्टीले नै आपत्ति जनाएपछि सरकार पछि हट्न बाध्य भयो । चैत १३ गते प्रधानमन्त्रीको सरकारी निवास बालुवाटारमा बसेको सत्तारुढ दलहरूको बैठकले भूमिसम्बन्धी अध्यादेश अगाडि नबढाउने निष्कर्ष निकालेको थियो ।

प्रतिनिधि सभाको पाँचौ अधिवेशन माघ १८ गते शुक्रबारदेखि प्रारम्भ भएर चैत १९ गते मंगलबारसम्म जम्मा ६१ दिन चालु रहेको थियो । जसमध्ये २५ दिनमा २७ पटक बैठक बसेर ११८ घण्टा २१ मिनेट संसदीय काम कारबाही भएको सभामुख देवराज घिमिरेको सचिवालयले जनाएको छ । हिउँदे अधिवेशनमा प्रतिनिधिसभामा १२ वटा सरकारी र एउटा गैरसरकारी विधेयक दर्ता भएको थियो । जसमध्ये ५ वटा विधेयक संघीय संसद्को दुवै सभाबाट पारित भएका छन् । संसद् सचिवालयका अनुसार चार वटा विधेयक समितिमा विचाराधीन रहेका छन् भने तीन वटा विधेयक सदनमा प्रस्तुतमात्र भएका छन् ।

'जाति, रंग, क्षेत्र, भेषभूषा, राष्ट्रियता वा उत्पत्तिमा आधारित भेदभाव (कसूर र सजाय)' सम्बन्धी गैर सरकारी विधेयक दर्ताको अवस्थामा रहेको सचिवालयले जनाएको छ । प्रतिनिधिसभाको पहिलो, दोस्रो, तेस्रो र चौथो अधिवेशनमार्फत् प्राप्त सरकारी र गैरसरकारीतर्फका १३ वटा विधेयकमध्ये 'संवैधानिक परिषद् (काम, कर्तव्य र कार्यविधि) सम्बन्धी (पहिलो संशोधन) विधेयक' सोमबार (चैत १८) सर्वसम्मत पारित भएको छ ।

यस्तै 'जलस्रोत विधेयक' सम्बन्धी समितिको प्रतिवेदन सभामा प्रस्तुत भएको र 'बैकिङ कसूर तथा सजाय (दोस्रो संशोधन) विधेयक' राष्ट्रियसभाबाट फिर्ता भएर प्रतिनिधिसभामा टेबुल भएको सचिवालयले जानकारी दिएको छ । सचिवालयका अनुसार आठवटा विधेयक सम्बन्धित समितिमा विचाराधीन अवस्थामा छन् । 'मानव शरीर जलन नियन्त्रण तथा सजाय विधेयक' दर्ताको स्थितिमा रहेको छ । ' आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्व (पहिलो संशोधन) विधेयक, २०८१' लाई सरकारले माघ २७ गतेको बैठकको सहमतिमा फिर्ता लिएको थियो ।

चालु अधिवेशनमा राष्ट्रियसभामा उत्पत्ति भएका ४ वटा विधेयक प्रतिनिधिसभामा प्राप्त भए । जसमध्ये दुईवटा विधेयक सम्बन्धित समितिमा विचाराधीन छन् । 'नेपाल कानुन व्यवसायी परिषद् (पहिलो संशोधन) विधेयक'माथिको सैद्धान्तिक छलफल सकिँदा ' तिलगङ्गा नेत्र विश्वविद्यालय विधेयक' प्रतिनिधिसभामा प्रस्तुत भएको छ ।

पाँचौं अधिवेशनमा अघिल्ला अधिवेशनमा राष्ट्रियसभाबाट प्राप्त सातवटा विधेयकमध्ये चारवटा पारित गरी फिर्ता पठाइएको थियो । संसद् सचिवालयले 'सहिद दशरथ चन्द स्वास्थ्य विज्ञान विश्वविद्यालय विधेयक'सम्बन्धी समितिको प्रतिवेदन प्रतिनिधिसभामा पेश भएको जनाएको छ ।

'अख्तियार दुरुपयोग अनुसन्धान आयोग (तेस्रो संशोधन) विधेयक' सम्बन्धित समितिमा विचाराधीन अवस्थामा छ । 'राष्ट्रिय मर्यादासम्बन्धी विधेयक' सभामा प्रस्तुतमात्र भएको अवस्थामा रहेको सचिवालयले जनाएको छ । संसद्को हिउँदे अधिवेशनलाई विधेयक अधिवेशन पनि भनिन्छ । माघ १८ गतेबाट सुरु यो अधिवेशनबाट पारित (दुवै सदनले) नौवटा विधेयक राष्ट्रपतिले फरक-फरक मितिमा प्रमाणीकरण गरिसकेका छन् ।

राष्ट्रपति पौडेलले चैत १८ (सोमबार) मा संघीय संसद्का दुवै सदनबाट पारित भई पेस भएका पाँच अध्यादेशका प्रतिस्थापन विधेयक प्रमाणीकरण गरेका हुन् । दुवै सदनबाट पारित भएपछि शीतलनिवास पठाइएका पाँचै अध्यादेश राष्ट्रपतिले संविधानको धारा ११३ को उपधारा २ बमोजिम प्रमाणीकरण गरेका हुन् ।

अघिल्लो सरकारका पालामा हिउँदे अधिवेशनमा आगामी आर्थिक वर्षको बजेटका सिद्धान्त र प्राथमिकता (प्री-बजेट)माथि छलफलको अभ्यास सुरु भएको थियो । यही हिउँदे अधिवेशनमा पनि नयाँ आर्थिक वर्षको प्री-बजेटबारे पनि छलफल हुने भनिएको थियो । तर, यो छलफल गर्न सरकार इच्छुक देखिएन ।

पूर्ववर्ती सरकारका पालामा तत्कालीन प्रधानमन्त्री पुष्पकमल दाहाल 'प्रचण्ड'ले आर्थिक कार्यविधि तथा वित्तीय उत्तरदायित्वसम्बन्धी अध्यादेश ल्याएर संसद्मा प्री-बजेट छलफल तीन महिनाअघि गरिसक्नुपर्ने प्रावधानको सुरुवात गरेका थिए । तर, केपी शर्मा ओली नेतृत्वको सरकारले पूर्ववर्ती सरकारको उक्त प्रावधान हटाएर १५ दिन अगाडि प्री-बजेट छलफल गर्दा हुने पुरानै चलन ब्युँताएको छ ।

## नगरपालिकाको...

गर्दै नेपाली काँग्रेसका सांसद दुर्लभ थापाले लोकतन्त्रले सबै नागरिकलाई राजा बनाउने अधिकार दिएको उल्लेख गर्दै मुलुकमा कुनै राजा आवश्यक नरहेको टिप्पणी गरे । उनले भने, "नेपालमा न कुनै आन्दोलनको आवश्यकता छ, न त व्यवस्था परिवर्तनको आवश्यकता न राजाको आवश्यकता छ, न त कुनै रानीको आवश्यकता । प्रत्येक नागरिकलाई राजा बनाउने अधिकार लोकतन्त्रले दिएको छ । त्यसकारण तपाईंहरु सबै राजा हुनुहुन्छ ।"

उनले प्रधानमन्त्री तथा आफ्ना प्रतिनिधिले चित्तबुझ्दो र जनआकांक्षाअनुसार काम गर्न नसके अर्को पटकको चुनावमा उक्त प्रतिनिधि र दललाई जनताले स्वीकार नगर्ने बताउँदैं सबै जनप्रतिनिधिहरुले जनहितमा काम गर्न जरुरी रहेकोमा जोड दिए । उनले एकथरी पार्टीहरू मिसन ०८४ भन्दै हिँडेको उल्लेख गर्दै काम गर्न कुनै वर्ष कुर्न नपर्ने टिप्पणी गर्दै मुलुकले थप अन्धकार र आन्दोलन थेग्न नसक्ने र संविधानले नचिन्ने राजा ल्याउन लहलहैमा नलाग्न समेत आग्रह गरे ।

नगरप्रमुख सुरेन्द्र श्रेष्ठले मध्यपुर महोत्सव २०८१ को सफलताले नगरमा पर्यटन उद्योगको सम्भावना बढेको बताए । उनले मध्यपुर महोत्सव देशकै नमूना साँस्कृतिक महोत्सव बनेको जिकिर गर्दै महोत्सवपछि नगरमा कसरी दैनिक पर्यटक भित्र्याउन सकिन्छ भन्ने योजना निर्माणमा अघि बढको बताए ।

उनले मध्यपुर थिमि स्वास्थ्यमा उत्कृष्ट भएको स्मरण गराउँदैं ६० वर्ष माथिका ज्येष्ठ नागरिक, एकल महिला, ख वर्गका अपांगता भएका व्यक्ति, दलित परिवार र दर्ता सहयोगी गरी २ हजार ७३३ परिवारको निःशुल्क स्वास्थ्य बिमा गरिएको, २८३ जना बिरामीलाई ४६१ प्रिन्ट रगत उपलब्ध गराएको, सुत्केरी पोषण सामग्री वितरण ५६५, विपन्न नागरिक औषधी उपचार वापत प्रतिव्यक्ति ५ हजारका दरले १८८ जना, विपन्न नागरिक औषधी उपचार वापत प्रतिव्यक्ति १ लाखका दरले ९६ जना, ज्येष्ठ नागरिक सुस्वास्थ्य कार्यक्रम अन्तर्गत १ हजार १ सय जना लाभान्वित भएको र पाठेघरको मुखको क्यान्सर निःशुल्क स्क्रिनिङ १ हजार ३६ जनाको गरिएको जानकारी दिए ।

मध्यपुर थिमि नगरपालिकाका पुर्व नगरप्रमुख मदनकृष्ण श्रेष्ठले नगरपालिकाले तत्काललाई भन्दा पनि भविष्यलाई सोचेर योजना बनाई कार्य गर्नुपर्ने सुझाव दिए । उनले भौतिक पूर्वाधार मात्र होइन यहाँको साँस्कृतिक पक्षको संरक्षण र जगेर्ना गर्न पनि जोड दिनुपर्ने बताए ।

कार्यक्रममा बागमती प्रदेशका सांसद धनेश्वरी प्रजापति र अर्का सांसद भुवनकेशरी श्रेष्ठले मध्यपुर थिमि नगरपालिका आफ्नो मूलनारालाई आत्मसाथ गर्दै मध्यपुर महोत्सव आयोजना गरेर नयाँ पुस्तालाई मध्यपुर चिनाउन सफल भएको चर्चा गरे ।

कार्यक्रममा नगरपालिकाका प्रमुख प्रशासकिय अधिकृत रामबहादुर केसी, वडा नं. ३ का वडाअध्यक्ष एवम् नगर प्रवक्ता कृष्णहरी आचार्यले नगरका विभिन्न कार्यका बारेमा चर्चा गरेको थियो ।

## विश्व नेवा..

सम्मानपत्र प्रदान गरेका थिए ।

सो अवसरमा मेयर महर्जनले सम्पदा पुनःनिर्माण र अमूर्त संस्कृतिको निरन्तरतालाई महानगरपालिकाले प्राथमिकतामा राख्दै आएको बताए । उपमेयर डंगोलले संस्कृति, सम्पदा संरक्षणमा गुथियारहरुसंगै त्यसमा देखापरेका समस्या, कठिनाईको लागि राज्यलाई खबरदारी गर्ने अभियन्ता, कानुन व्यवसायी र सञ्चारकर्मीको भूमिका महत्त्वपूर्ण रहेको बताए । संस्कृति संरक्षणमा मातृभाषाको निकै परिपुरक सम्बन्ध रहेको उल्लेख गर्दै नेवाः समुदायले आफ्ना सन्तानलाई मातृभाषा सिकाउनुपर्नेमा जोड दिए ।

सो अवसरमा यल नेवाः समाजका अध्यक्ष विनोद ताम्रकारले नेवाः समुदायलाई एकता, आपसी समन्वयलाई वृद्धि गर्न यल नेवाः समाजले काम गरिरहेको बताए । वर्ल्ड नेवाः अर्गनाइजेशका अध्यक्ष सुरेन्द्रभक्त श्रेष्ठले अध्ययन र कामको सिलसिलसिलामा देशबाहिर रहेका नेवाः समुदायलाई जोड्न अर्गनाइजेसनले काम गर्दै आएको बताए ।

सो समारोहमा नेपालबाट हराएका मूर्तिहरु अमेरिकाबाट फर्काउन महत्त्वपूर्ण योगदान पुर्याउन नेवाः गुथि न्यूयोर्कका अध्यक्ष विजयमान सिंह, अधिवक्ता सञ्जय अधिकारीले विदेशबाट मूर्ति स्वेदश फर्काउन सांस्कृतिक अभियन्ता, सम्पदा र समुदायको महत्त्वपूर्ण भूमिका रहेको उल्लेख गर्दै आआफ्नो धारणा राखे ।

सो अवसरमा ज्यापू समाजका अध्यक्ष सन्तमान महर्जन, ज्यापू महागुथिका निर्वतमान अध्यक्ष राजभाई जकमीलगायतले मन्तव्य राखेका थिए।

## रजकको...

संघ संगठनका अध्यक्षहरूले महासंघले गरेको आन्दोलनलाई ऐक्यबद्धता जनाएका छन् ।

चैत १५ गते रहस्यमयी तरिकाबाट आगजनीमा परी मृत्यु भएका पत्रकार सुरेश रजकको हत्या र कान्तिपुर टेलिभिजन, अन्नपूर्ण पोस्ट लगायतका कार्यालयमा तोडफोड र आगजनीको विरोध जनाएका छन् । उनीहरूले तोडफोड आगजनी र हत्यामा संलग्न जोसुकै भएपनि तत्काल सुक्ष्म रुपमा अनुसन्धान गरी तत्काल आवश्यक कारबाहीको दायरामा ल्याउनुपर्ने मागसमेत गरेका छन् ।

कार्यक्रममा नेपाल पत्रकार महासंघ जिल्ला शाखा भक्तपुरका अध्यक्ष सुन्दर शिल्पकारले पत्रकारको हत्यामा संलग्न र मिडिया क्षेत्रमा आक्रमण गर्नेहरूलाई कारबाहीको दायरामा नल्याएसम्म आन्दोलनलाई निरन्तरता दिने जानकारी गराए । उनले दोषीलाई तत्काल कारबाही गरी कानुनी कठघरामा उभ्याउनुपर्ने र सुरेश रजकको परिवारलाई उचित क्षतिपूर्ति तथा सहित शहीद घोषणा गर्नुपर्ने माग समेत गर्नुभयो ।

कार्यक्रममा नेपाल प्रेस युनियन जिल्ला शाखा भक्तपुरका अध्यक्ष रोशन शिल्पकारले पत्रकार महासंघले गरेको आन्दोलनलाई अझ सशक्त बनाएर जानुपर्ने बताए । उनले बन्द कोठाभित्र नभई सडक तताउनुपर्ने समेत माग गर्दै नेपाल प्रेस युनियन पत्रकार महासंघले गरेका जुनसुकै विरोध कार्यक्रममा बलियो उपस्थिति जनाएर अघि बढ्ने प्रतिबद्धता व्यक्त गरे । त्यस्तै कार्यक्रममा प्रेस चौतारीका सचिव नारायण थापाले पत्रकार रजकको हत्यामा संलग्न अपराधीलाई तत्काल कानुनी दायरामा ल्याउन सरकारसँग माग गरे । सरकारले हत्यामा संलग्नलाई कारबाही नगरिए भविष्यमा पत्रकारमाथि यस्तै प्रकारको साङ्गतिक हमला र हत्या जस्ता कार्यले निरन्तरता पाउने र पत्रकारले कार्यक्षेत्रमा खटिदा असुरक्षित महशूश गर्नुपर्ने अवस्था आउने बताए । यस्तै प्रेस सेन्टर नेपालका अध्यक्ष मदन ढुङ्गानाले प्रमाणसहित भिडियोहरू सामाजिक सञ्जालमा छत्ताछुल्ल भएपनि सरकारले आवश्यक अनुसन्धान कार्य गर्न नसकेको र घटना भएको यतिका दिन बित्दा पनि दोषीलाई कारबाही गर्न नसकेकोप्रति चिन्ता व्यक्त गरे ।

कार्यक्रममा नेपाल आदिवासी जनजाति पत्रकार महासङ्घ भक्तपुरका सचिव दीपक श्रेष्ठ नेवा पत्रकार राष्ट्रिय दबुका अध्यक्ष रामगोपाल तमखुले महासंघले गरेका आन्दोलनका सबै गतिविधिमा सक्रिय सहभागिता जनाउने बताएका छन् । कार्यक्रममा क्रियाशील पत्रकार मञ्चका अध्यक्ष रमेश गिरीले दिवंगत पत्रकार सुरेश रजकले चार महिनासम्म पनि तलब नपाएको कुरा बाहिरिएको भन्दै मिडिया मालिकहरूले रजक माथि अत्याचार गरेको समेत बताए । संविधानले नै पत्रकारको प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता सुरक्षित गरेको भन्दै संविधान विपरीत कार्य गर्ने जोसुकैलाई पनि कारबाही गर्नुपर्ने माग राखे । कार्यक्रममा राष्ट्रिय सञ्चार केन्द्रका अध्यक्ष पेसल आचार्यले घटनालाई बङ्गाउन विभिन्न खालको भिडियोहरू सामाजिक सञ्जालमा आएको भन्दै पोस्टमार्टम नै नगरिएका रजकको प्रहरीले नै हत्या गरेको भन्दै भिडियो आएकोप्रति आपत्ति जनाएको छ । नेपाल पत्रकार महासङ्घले फिल्डमा खट्ने पत्रकारको सुरक्षाको निम्ति पनि चासो दिनुपर्ने भनाइ थियो । उनले घटनाको सत्यतथ्य छानबिन गरी सरकारले दोषीलाई कारबाहीको दायरामा ल्याउन समेत माग गरे । कार्यक्रममा नेपाल पत्रकार महासंघका सल्लाहकार पुष्करराज बुढाथोकीले पत्रकारको पेशागत हक अधिकार सुनिश्चितताको लागि पत्रकार महासङ्घ जुनसुकै तहसम्म लड्न तयार हुनुपर्ने बताए । कार्यक्रममा पत्रकार महासंघ जिल्ला शाखा भक्तपुरका कार्यसमिति र अन्य विभिन्न पत्रकारहरुका संघ संस्थाका प्रतिनिधिहरुको सहभागी रहेको थियो ।

त्यस्तै नेवा पत्रकार राष्ट्रिय दबूले पनि पत्रकार सरेश रजकको हत्या भएकोमा एक्यबद्धता जनाउँदै भक्तपुरको दत्तात्रय मन्दिर परिसरमा विरोध कार्यक्रमको आयोजना गरेको छ । दबूले पत्रकार रजकलाई राज्यले शहीद घोषणा गर्नु पर्ने र पिडीत परिवारलाई राज्यले आवश्यक सहयोग गर्नुका साथै दोषीलाई तत्काल कानुनी दायरामा ल्याएर हदैसम्मको कारवाही गर्नु पर्ने माग पनि गरेको छ । हुन त संघीय सरकारका प्रधानमन्त्री के.पी. ओली शर्माले दोषीलाई कुनै पनि हालतमा छुट नदिइने र हदैसम्मको कारवाही गर्ने प्रतिबद्धता जनाइसकेको छ ।

## समाजवादी...

हामीलाई महासामन्तको खाँचो छैन । हामीलाई सामन्ती तत्वहरूको खाँचो छैन,' विप्लवले भने, 'हामीलाई पैतलामुनि जनतालाई धुलोसरी पनि नटेर्ने, सामन्तवादी हैकम चलाउने प्रवृत्तिहरूको हामीलाई खाँचो छैन । शासकहरूको हामीलाई खाँचो छैन ।'

यता नेसपाका अध्यक्ष यादवले पनि अन्य नेताजस्तै सबैको साझा भावना समेट्ने गणतन्त्रलाई धावा नबोल्न राजावादीलाई आग्रह गरे । उनले सबै वर्ग, जाति भाषा र समुदायलाई समेट्ने एक मात्रै व्यवस्था गणतन्त्र भएकाले यसको विकल्प कुनै पनि व्यवस्थामा खोज्न नसकिने तर्क गरे ।

चार जना नेताहरुले आपत्तिजनक र अश्लील शब्द प्रयोग गरेनन् । उनीहरूले राजनीतिक चरित्र देखाउँदै कार्यकर्तालाई त्यही ढङ्गले प्रस्तुत गराएका थिए ।

संयमित र शान्त भएको समाजवादी मोर्चाको सभा राजावादीको उग्र प्रदर्शनका कारण सञ्चारमाध्यममा यसको कुनै चर्चा भएन । देशका ठूला मिडिया र आम जनतालाई सामाजिक सञ्जाल मार्फत नकारात्मक सूचना र हिंसालगायत मानविय आक्रोलाई क्यामरामा कैद गर्दै आम जनमानसमा नकारात्मक सन्देश पस्कन माहिर मानिएका युट्युव च्यानल संचालकहरु जे भ्युज बढाउने नाममा तीनकुनेमा भएको राजवादी आन्दोलनमा हिंसा सुरु भएपछि सबैको ध्यान उतै तानिएको देखिन्छ । शान्तिपूर्ण प्रदर्शन गर्ने नाममा केही राजावादीहरूले तीनकुनेमा हिंसात्मक प्रदर्शन गर्दा भौतिक संरचनामा पनि ठूलो क्षति भएको छ । क्षति विवरण सरकारले सार्वजनिक गरेको छैन । दुई व्यक्तिको ज्यान गएको छ ।

यस्तै व्यापारिक कम्प्लेक्समा आगजनी, तोडफोड र लुटपाट पनि भएको छ । एकीकृत समाजवादीको कार्यालयमा अगजनी भयो । कान्तिपुर र अन्नपूर्ण पोस्टको कार्यालयमा आक्रमण भयो ।

यस्तै सरकारी तथा निजी गाडीमा आगजनी गरियो । राजावादी आन्दोलनको नेतृत्व गरेका दुर्गा प्रसाईंले नै प्रहरीको तीनवटा घेरा तोडेर उकासेपछि भीड अराजकतातिर गयो । राप्रपा वरिष्ठ उपाध्यक्ष रवीन्द्र मिश्र, महामन्त्री धवल शमशेर राणाले पनि सभास्थलबाट भीडलाई उतेजित बनाए । राजनीतिक विश्लेषहरू तीनकुनेमा शुक्रबार भएको गतिविधि राजनीतिक दलको नभएर अराजकहरूको भएको बताउँछन् । विश्लेषक श्याम श्रेष्ठ समाजवादी मोर्चाको कार्यक्रम शालीन भएकाले राजावादीसामु छायामा परेको दाबी गर्छन् । उनी तीनकुने घटनाका मुख्य दोषी पूर्वराजा ज्ञानेन्द्र शाह, नवराज सुवेदी, प्रसाईं, मिश्र र राणा भएकाले उनीहरूलाई सरकारले कारबाही गर्नुपर्ने माग गरेका छन् । त्यस्तै सोही घटनामा संचारकर्मी सुरेश रजकको हत्यासमेत भएको थियो । यसरी राजावादीको आन्दोलनका नाममा हिंसात्मक घटना घटाउने पूर्व तयारी रहेको घटनाक्रमले पनि पुष्टी गरेको छ । यसक्रममा भिडले मुख्यतया संचार गृह र संचारकर्मीलाई मुख्य निशाना बनाएको र व्यापारिक तथा नीति निवासमा समेत आगजनी र तोडफोड गर्नुका साथै लुटपाटजन्य कार्य भएको थियो ।

यही कार्यले संचार माध्यम र समाजमा नकारात्मकता फैलाउदै आफ्नो सोझ्यान तल्लीन हुने युट्युव च्यानल संचालकहरुका कारण दलहरुबाट भएको शालीन विरोधको प्रदर्शन छायाँमा पर्न गएको हो ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# ‘नरसिंहाः अवतार’को फर्स्टलुक सार्वजनिक

काठमाडौं । फर्स्टलुक सार्वजनिक गर्दै फिल्म ‘नरसिंहाः अवतार’को प्रदर्शन मिति पनि तय गरिएको छ । काठमाडौंको ग्लोबल कलेजमा आयोजित कार्यक्रममा फिल्मको फर्स्टलुक सार्वजनिक गरिएको हो ।

यो फिल्मलाई आगामी वर्ष जेठ ९ गतेबाट रिलिज गर्ने घोषणा निर्माणपक्षले गरेको छ । दिवाकर भट्टराईको लेखन तथा निर्देशनमा तयार भएको यो फिल्मबाट नायक राजेश हमालले ८ वर्षपछि नेपाली फिल्म क्षेत्रमा कमब्याक गर्दैछन् । यसकारण पनि यो फिल्म बहुप्रतिक्षित छ ।

कार्यक्रममा नायक हमालले आफूले ३ सय बढी फिल्ममा काम गरे पनि यति ठूलो पोस्टर हालसम्म नदेखेको बताए । यो फिल्मको हालसम्म कै ठूलो दाबीसहित पोस्टर सार्वजनिक गरिएको हो । यो फिल्ममा राजेश हमालको साथमा सरोज खनाल, नीर शाह, राज कटुवाल, नीति शाह, सनिषा भट्टराई, उषा खड्गी, अर्जुन श्रेष्ठ, प्रशान्त ताम्राकार, रमेश चन्द सोडारी, प्रकाश कुँवर, राजिभ जंग बस्नेत, दीपा शाही, प्रभु श्रेष्ठ, अमित गिरी, एभेलिना खड्का, समाइरा थापा, आशा पौडेल लगायतका कलाकाको अभिनय छ ।

राजुविक्रम थापाको छायाँकन रहेको फिल्ममा कविराज गहतराज र माइकल चन्दको कोरियोग्राफी, चन्द्र पन्तको एक्सन, मिलन श्रेष्ठ र साहिल खानको सम्पादन, शम्भुजित बाँस्कोटा र अर्जुन पोखरेलको संगीत छ । पोस्टरको डिजाइन राकेश दाहालले गरेका हुन् । फिल्ममा दीपक शर्मा ढकाल, नरेन्द्र महर्जन, ध्रुव न्यौपाने, नेम महर्जनको लगानी छ । करण सिंह प्रोडक्सन डिजाइनर रहेको यो फिल्मका एसोसियट निर्देशक वसन्त अधिकारी हुन् ।

यो फिल्म हेर्न निक्कै उत्साहित भएको ग्लोबल कलेजका विद्यार्थीहरूले बताए । फिल्म ‘नरसिंहाः अवतार’लाई प्रेम, सस्पेन्स र एक्सनको मिश्रण भनिएको छ ।

# बहु कलाकारको अभिनय रहेको नेपालभाषाको म्युजिक भिडियो

ललितपुर । अहिले गीतसंगीत क्षेत्रमा नेपालभाषाको म्युजिक भिडियो निर्माणको लहर तिब्र गतिमा चलिरहेको छ । यसै क्रममा “धेबा फुत बाबा धेबा फुत” बोलको गीतको म्युजिक भिडियोमा बहु कलाकारको अभिनय प्रयोग गरेर नौलो स्वाद पस्कने प्रयास भएको छ । यसमा भुपेन्द्र बज्राचार्य, सुरजबीर बज्राचार्य, अमोघबीर बज्राचार्य, निल शाक्य, अमर चित्रकार र अनुप शाक्यले आवाज दिएको छ भने यस भिडियोमा गायनमा संलग्न सबै कलाकारहरुका साथमा सलोना बज्राचार्य, मोहिद्दिन खान, श्रुयति शाक्य, अर्चा बज्राचार्य, लबिक महर्जनलगायतका कलाकार हरुले अभिनय रहेको छ ।

यसरी बहु गायक र बहु कलाकार प्रयोग गरिएको यो गीतको भिडियो शनिबार कीर्तिपुर सिनेप्लेक्समा प्रिमियर गर्ने तयारी भएको जनाएको छ ।

ललितपुर महानगरपालिका १६ वडाका वडाध्यक्ष निर्मलरत्न रत्न शाक्यका अनुसार शनिबार हुने प्रिमियर कार्यक्रम पनि फरक शैलीमा गर्ने तयारी भइरहेको छ जनाएको छ । कार्यक्रम वडा १६ कलाकार समितिको आयोजना रहने सो प्रिमियरको लागि कलाकार समितिका संयोजक सुरजबीर बज्राचार्यले कार्यक्रमको तयारी अन्तिम् चरणमा पुगिसकेको जानकारी दिए । मल्टि स्टार भनि चर्चा भइरहेको यो म्युजिक भिडियोका रचनाकार र संगीतकार भुपेन्द्र बज्राचार्य हुन् । यसको छायांकन र सम्पादन अमर चित्रकारले गरेका हुन् ।

# “जनै हराएको बाहुन”बाट सुशांकको कमब्याक

काठमाडौं । चलचित्र ‘जनै हराएको बाहुन’ निर्माण घोषणा देखि नै चर्चामा छ । चैतको अन्त्यबाट छायांकनमा जाने तयारीमा ४० दिनको छायांकन सेड्युल रहेको निर्माणपक्षले जनाएको छ ।

चलचित्रको केही समयअघि थिम मोसन पोस्टरमार्फत सार्वजनिक भइसकेको छ । ‘जनै हराएको बाहुन’ले आमा र छोराबीचको इमोस्नल कथा भन्नेछ । यसले आमाको सुखका लागि छोराले गर्ने संघर्षको कथा सिनेमाले भन्नेछ । चलचित्रले गाउँबाट सहर आएको एक सामान्य व्यक्तिले भोग्नुपरेका अनपेक्षित घटना र त्यसले उनको जीवनमा ल्याएको परिवर्तनको कथालाई भन्नेछ ।

‘जनै हराएको बाहुन’लाई हिमाल न्यौपानेले निर्देशन गर्नेछन् । उनको यो डेव्यु निर्देशन छन् । यो चलचित्रको असोसियट निर्देशक ‘प्रेमगीत ३’ अभिनेता मनिष राउत छन् । नयाँ कथावस्तु र आकर्षक शीर्षकसहित निर्माण हुने ‘जनै हराएको बाहुन’मा कलाकार हरूको पनि लाइनअप बलियो देखिएको छ । यो चलचित्रको मुख्य भूमिकामा अभिनेता विजय बराल फाइनल भइसकेका छन् । मुख्य अभिनेत्रीमा केकी अधिकारी र मिरुना मगर छन् । साथमा गौरव पहाडी र रेअर राईले काम गर्ने पक्का भइसकेको छ । यसैगरि, यो चलचित्रमा अभिनेता सुशांक मैनाली पनि जोडिएका छन् । नेसनल अवार्ड विजेता अभिनेता मैनालीले ‘जनै हराएको बाहुन’मा मुख्य भूमिका निभाउने पक्का भएको छ । उनी अनुबन्धित भएसँगै लामो समयपछि नेपाली सिनेमामा पुनः देखिने भएका छन् । उनले ‘साँगुरो’, ‘टलकजंग भेर्सस टुल्के’लगायत चलचित्रमा काम गरेका थिए । सम्बन्धका धागोहरूलाई केन्द्रमा राखिएको कथा मन परेकाले आफू धेरै वर्षपछि नेपाली चलचित्रमा फर्किन लागेको मैनालीले बताएका छन् ।

हरितालिका तीजको अवसर पारेर आगामी भदौ १० गते रिलिज हुने छ । मैनालीको प्रवेशले सिनेमा निर्माण टोलीलाई थप ऊर्जा मिलेको असोसियट निर्देशक राउतले बताए । पेपरक्लिप प्रालिले निर्माण गर्न लागेको चलचित्रको कथा, पटकथा र संवाद भानुभक्त ढकालले लेखेका छन् । चलचित्रमा थानेश्वर गौतमको संगीत रहने बताइएको छ ।

चलचित्रको छायांकन चैत २५ गतेदेखि ४० दिन को सेड्युल अनुसार पाल्पा र काठमाडौंमा गरिनेछ । यस सिनेमाका निर्माता आदित्य फिल्म्स रहेका छन् भने नवीन गुरुङले छायां गर्नेछन् ।

# सर्टफिल्म “दृश्य” को पोष्टर सार्वजनिक

काठमाडौं । लघुचलचित्र ‘दृश्य’ (द लाईट अफ आई) को निर्माण सम्पन्न भएको छ । काठमाडौंमा छायांकन गरिएको ‘दृश्य’ को निर्माण कार्य सम्पन्न भएसँगै निर्माण टीमले पोष्टर सार्वजनिक गरेको छ । पोष्टरमा एउटा आँखाभित्र दुईजना पात्रहरु देखाईएको छ । एकजना दृष्टिविहिन र अर्को सामान्य मानिसलाई आँखाभित्र अटाईएको छ । दृश्यको पोष्टर रसिकराजले तयार पारेका हुन् ।

ऐना आर्टसको प्रस्तुति तथा आश्री इमिग्रेशनको सहकार्यमा निर्माण गरिएको ‘दृश्य’को निर्माता नितु घिमिरे रहेकी छिन् । आश्री इन्भेष्टमेन्टको सहयोगमा तयार भएको लघुचलचित्रका निर्माण प्रमुख रामेश्वर भट्टराई हुन् । आश्री इमिग्रेशन, आश्री इन्भेष्टमेन्ट, आश्री ट्राभल्सका सञ्चालक समेत रहेका भट्टराई कथावस्तु मन परेकाले लघुचलचित्र निर्माण गरिएका बताउँछन् ।

‘दृश्य’मा नारायणराज चौलागाईँ, सुवास प्रसाद गजुरेल, राकेश श्रेष्ठ, आरुष मगर, युनिसा कार्की, बिदुर प्रसाद सिग्देल, सन्तोष सुवेदी, नरेन भट्टराई, रमेश बज्राचार्य, चक्र प्रसाद पोखरेल, उद्धब दंगाल, नितु घिमिरे, सुरेन्द्र क्षेत्री, सुरज आचार्य, रिजन थापा लगायतका कलाकारहरुको अभिनय रहेको छ । सन्तोष कार्की, उद्धव दंगाल, रेनुका कार्की, अविन ठटाल र कृषला श्रेष्ठले स्वराङ्कन गरेका छन् । मुन क्रियशन फिल्म एकेडेमीमा कार्यशाला गरिएको लघुचलचित्रको कला निर्देशन सुमित राईले गरेका छन् । सन्तोष श्रेष्ठको संगीत रहेको ‘दृश्य’को बाँसुरी वादकका रुपमा नगेन्द्र राई रहेका छन् । सहायक निर्देशन करण साउदले गरेका छन् । अनिल कुमार महर्जनको सम्पादन तथा रंग संयोजन रहेको छ ।

‘दृश्य’को पात्र र चरित्रकै लागि ६ महिनादेखि तयारी गरेर आफुले सकेसम्म मेहनत गरेको कलाकार नारायणराज चौलागाई बताउँछन् । उनले यसै लघुचलचित्रमार्फत् मुख्य पात्रका रुपमा डेब्यु गरेका हुन् । नारायण काइँलोका रुपमा परिचित उनी गजलकार तथा गीतकारसमेत हुन् । नारायण जिसीको सिनेमाटोग्राफी रहेको ‘दृश्य’को कास्टिङ डिरेक्सन तथा निर्माण व्यवस्थापन सुरेन्द्र क्षेत्रीले गरेका हुन् । सबैको अथक प्रयास र मेहनतले लघुचलचित्र राम्रो बनाउने प्रयास गरेको क्षेत्री बताउँछन् ।

‘दृश्य’को लेखन तथा निर्देशन मोहन अभिलाषीले गरेका हुन् । बाहिरी आँखाले देखेको भौतिक दुनियाँ र हृदयको आँखाले महसुस गर्ने अन्तरमनको दुनियाँलाई तुलनात्मक रुपमा लघुचलचित्रमा देखाउन खोजिएको अभिलाषी बताउँछन् । ‘मानिस जन्मेपछि मर्नुपर्छ, यो प्रकृतिको नियम नै हो । भौतिक दुनियाँमा बाँच्नको लागि मानिसहरुले जीवनमा अनेक संघर्ष गरिरहेका हुन्छन् । हामी बाहिरी आँखाले देखेको भौतिक दुनियाँमा रुमल्लिरहेका छौं र लोभ, मोह, माया, ईर्ष्या, डाह, घृणा, रिस, आह्रिस आदिमा अल्झिरहेका हुन्छौं । केहि समय आँखा बन्द गरेर सोच्ने हो भने पनि मन र मष्तिष्कले मानिसलाई अझ सुन्दर जीवन जिउन सिकाइरहेको हुन्छ ।’ यसैको परिवेशमा लघुचलचित्रको कथावस्तु रहेको निर्देशक अभिलाषी बताउँछन् । ‘दृश्य’लाई विभिन्न ओटिटी प्लेटफर्ममार्फत् रिलिज गर्नुअघि अन्तराष्ट्रिय चलचित्र महोत्सवहरुमा सहभागी गराइने उनी बताउँछन् । उनले यसअघि निर्माण गरेका लघुचलचित्र ‘घुर्रा’, ‘भाउ’, ‘पाउलो’, र ‘द स्कूल वाल’ले विभिन्न अन्तराष्ट्रिय चलचित्र महोत्सवहरुमा छनोट भएर अवार्ड पनि प्राप्त गरेको थियो । उनी पछिल्लो समय नयाँ चलचित्र निर्माणको तयारीमा रहेका छन् ।

# चलचित्र ‘अभिमन्यु’को शुभमुहूर्तसागै छायांकन सुरु

काठमाडौं । चलचित्र ‘अभिमन्यु’को शुभमुहूर्त गरिएको छ । निर्माणपक्षले आज कीर्तिपुरमा चलचित्रको पूजा गर्दै शुभमुहूर्त गरेको हो ।

शुभमुहूर्तमा चलचित्रका अधिधकांश मुख्य कलाकारको उपस्थिति थियो । मुहूर्त सट लिइएसँगै सिनेमाको छायांकन सुरु भएको छ ।

‘अभिमन्यु’मा गौमाया गुरुङ, सरिता गिरी, लक्ष्मी बर्देबा, शिशिर वाङ्देल, किरण श्रेष्ठलगायत कलाकार मुख्य भूमिकामा छन् ।

निर्माता विनोद पौडेलले सिनेमाको पात्रअनुसार बलियो लाइनअप तयार गरिएको बताएका छन् ।

सर्वकालीन ब्लकबस्टर सिनेमा ‘पूर्ण बहादुरको सारङ्गी’ निर्माता पौडेलका अनुसार ‘अभिमन्यु’ आगामी भदौ २७ गते रिलिज हुनेछ ।

चलचित्रको थिम पोस्टरले चक्रव्यूह र पैसाबीचको संघर्षलाई प्रस्तुत गर्ने संकेत गरेको छ । पैसाको प्रलोभनमा चक्रव्यूहमा फस्ने र त्यहाँबाट उम्किन खोज्ने व्यक्तिको संघर्षको सिनेमाको मुख्य कथा भएको बताइएको छ ।

सेभेन सिज सिनेमाको प्रस्तुति निर्माण हुने सिनेमा ‘अभिमन्यु’लाई सुशान्त गौतमले निर्देशन गर्नेछन् । यो उनको डेब्यु निर्देशन हो ।

मुकेश खनालको लेखन रहेको चलचित्रको क्रिएटिभ निर्देशक मदन थापा हुन् । थापाले यसअघि चलचित्र ‘बाटो : रोड टु डेथ’ निर्देशन गरेका थिए ।

विनोद पौडेल र गुञ्जन गिरी निर्माता रहेको सिनेमाका रमेश चौलागाई र हरि श्रेष्ठ सह-निर्माता रहेका छन् । ‘अभिमन्यु’मा शरद महतोको डिओपी रहनेछ ।

यो चलचित्र विश्वभर एक साथ हिन्दी र नेपाली भाषामा रिलिज हुनेछ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



थिमि टाइम्स
THIMI TIMES WEEKLY
साप्ताहिक



वर्ष १८ अङ्क ३२ ने.सं. ११४५ चौलाथ्व द्वादशी चैत्र २७ गते बुधबार, २०८१ 09 April 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

# नेपालको कूटनीति : कार्यान्वयनको खाका नहुनुले खोक्रो नारा मै सीमित !



काठमाडौं । प्रधानमन्त्री केपी शर्मा ओलीले सोमबार काठमाडौंमा आयोजना भएको 'हिमालयन संवाद'मा विश्व सम्बन्ध र नेपालको विदेश नीतिबारे व्यक्त गरेका धारणाले नेपालको भूराजनीतिक संकटको जटिल चित्र उजागर गरेको छ । विश्वको बदलिँदो शक्ति सन्तुलन, दुई छिमेकी (भारत र चीन) सँगको सम्बन्ध र अमेरिकी सहयोग कटौती जस्ता मुद्दामा उनको लामो मन्तव्य सांकेतिक र लाक्षणिक थियो । तर यो अभिव्यक्तिले नेपालको विदेश नीतिमा स्पष्टता र ठोस रणनीतिको अभावलाई प्रस्ट्याएको छ ।

प्रधानमन्त्री ओलीले 'सबैसँग मित्रता, कसैसँग शत्रुता नराख्ने' र ' तीन साथी' को उदाहरणले नेपालको असंलग्न नीतिलाई जोड दिएको छ । 'पेकिङ वा दिल्लीतिर नढल्किएको, काठमाडौंमै छु' भन्ने भनाइले स्वतन्त्र र तटस्थ पहिचानको दाबी गर्छ । तर 'अर्काको खेतको कुलो भत्काउने' र 'सधैं चिया खुवाउने साथी' जस्ता सांकेतिक अभिव्यक्तिले भारतप्रति परोक्ष असन्तुष्टि व्यक्त गर्छ । विभिन्न दृष्टान्तको सहाराले कूटनीतिक टिप्पणी गर्ने प्रधानमन्त्री ओलीको नौलो र बदलिएको शैली हो ।

आलोचनात्मक दृष्टिकोणबाट यो सांकेतिकता उनको नेतृत्वमा नेपालको विदेश नीतिमा देखिएको रणनीतिक अस्पष्टताको परिचायक हो । नेपालले भारत र चीनबीच सन्तुलन कायम गर्न खोजे पनि व्यवहारमा यो नीति कमजोर रहेको बिश्लेषकहरुको बिश्लेषण छ ।

'भूराजनीतिलाई कमजोरी ढाक्ने आवरण नबनाऔं' भन्ने उनको आह्वान सही भएपनि, ठोस कार्ययोजनाको अभावले यो विषयको तौल कम भएको छ । यो सन्तुलन सैद्धान्तिक बयानबाजीमा सीमित छ, जसले व्यवहारिक चुनौतीहरूलाई सम्बोधन गर्न असफल देखिन्छ । बैंककमा भएको प्रधानमन्त्री ओली र भारतीय नरेन्द्र मोदीको भेटलाई दुवै पक्षले 'सौहार्दपूर्ण र सार्थक' भने पनि, हिमालयन संवादमा प्रधानमन्त्री ओलीको भारतप्रतिको कटाक्षले यो भेटले ठोस निष्कर्ष निकाल्न नसकेको देखाउँछ । 'सधैं चिया खुवाउने साथीले एकदिन नखुवाउँदा रिसाउने' र 'अर्काको कुलो भत्काउने' जस्ता भनाइले भारतको परम्परागत प्रभाव र त्यसमा आएको परिवर्तन संकेत गर्छ । लिपुलेक-कालापानी विवाद, अमेरिकी सहयोग कटौतीमा भारतको हस्तक्षेपको आशंका र पूर्वराजाको मुद्दामा भारतको समर्थनको शंकाले अविश्वासको खाडल देखिन्छ ।

यो तनावमा नेपाल-भारत सम्बन्धको आधारभूत चुनौती होः विश्वासको कमी । प्रधानमन्त्री ओलीले 'शासकहरूले पहिला भूराजनीतिक जटिलताका नाममा भारतलाई खेल्न दिएर बानी बिगारे' भनेर भारतलाई दोष दिए

बाँकी पेज ७ मा

# दलका कार्यक्रममा देखिएन दलका झण्डा



काठमाडौं । राष्ट्रिय प्रजातन्त्र पार्टीको आह्वानमा बल्खुमा आयोजना गरेको बृहत् खबरदारी सभामा देशको राष्ट्रिय झन्डाको बाहुल्यता देखिएको छ । सभामा सहभागी हुन आएका अधिकांशले राष्ट्रिय झन्डा बोकेका थिए । त्यहाँ सीमितले मात्र दलको झण्डा बोकेको दखिएको छ । यस्तै यस अघि नेपाली कांग्रेस, नेकपा एमाले र नेकपा माओवादीके कार्यक्रमहरुमा पनि राष्ट्रिय झण्डाहरु केही मात्रामा देहिएका थिए । तर ती कार्यक्रममा दलकै झण्डाको बाहुल्यता थियो ।

यस अगाडि भएका राप्रपाका कार्यक्रममा पार्टीको झण्डाको प्रयोग हुने गरेकोमा पछिल्लो समय भने राष्ट्रिय झण्डाको प्रयोगको क्रम बढी रहेको देखिन्छ । यसरी दलगत झण्डाको प्रयोगको कमिहुनु बर्तमान समयमा दलहरु प्रति आज जनताको वितृष्णा रहेको रुपमा पनि लिन सकिन्छ ।

विगतमा भएको स्थानीय तहको निर्वाचनका क्रममा स्वतन्त्र उम्मेदवारहरूले प्रचारको क्रममा राष्ट्रिय झण्डाको प्रयोग गरेका थिए । त्यसमा सबैभन्दा अगाडि थिए बालेन शाह । त्यस्तै

बाँकी पेज ७ मा

# बालबालिका र युवालाई अपराधबाट बचाउन कानुन बुझाउनुपर्ने आवश्यकता : ढकाल




भक्तपुर । नेकपा(माओवादी केन्द्र)का केन्द्रीय सदस्य, लेखक एवम् बिश्लेषक डीपी ढकालले महिला र युवालाई कानुनी ज्ञान बढी आवश्यक रहेको बताएका छन् । महिला बिकास केन्द्रले थिमिमा आयोजना गरेको कानुनी अधिकार सम्बन्धी सचेतना कार्यक्रमलाई मंगलबार उद्घाटन गर्दै नेता ढकालले कानुनले दिएको अधिकार थाहा नहुँदा महिलाहरु हिंसामा परेर पनि सहेर बस्नुपर्ने बाध्यता रहेको बताए । उनले महिला हिंसा न्यूनीकरणका लागि यस्ता कार्यक्रम उपयोगी हुने बिश्वास व्यक्त गरे ।

त्यस्तैगरी पछिल्लो समय बालबालिका र युवाहरु साइबर अपराधमा फसिरहेका उल्लेख गर्दै उनले कानुनी ब्यवस्था बारे थाहा छैन भन्न नपाइने बताए । उनले बालबालिका र युवालाई अपराधबाट बचाउन कानुन बुझाउनुपर्ने आवश्यकता रहेको बताए । कानुनले दिएका अवसर र अधिकार बारे थाहा नहुँदा निराशा बढेको जिकिर गर्दै उनले कानुनप्रदत्त अधिकार प्रयोग गर्न सचेतना बढाउनुपर्ने प्रष्ट पारे ।

देशमा तीन तहका सरकार रहेका र तीनै तहले कानुन बनाउने र लागू गर्ने भएकोले कानुन सबैले जानून भन्ने कुरामा पनि उनले जोड दिए । थाहा नभएपनि कानुनले उन्मुक्ति नदिने हुँदा कानुन बुझ्नुको बिकल्प नभएको उनले बताए ।

सरकार र समाजले विकासलाई भौतिक पूर्वाधारको रुपमा मात्र बुझ्दा समस्या भएको बताउँदै बागमती प्रदेश सरकारका पूर्व मुख्यमन्त्रीका राजनीतिक सल्लाहकार समेत रहेका नेता ढकालले मानवीय र सामाजिक बिकासमा कम ध्यान दिइएको प्रति चिन्ता ब्यक्त गरेका थिए । सो अवसरमा मध्यपुर थिमि नगरपालिकाका शिक्षा शाखा प्रमुख ज्ञानेन्द्रप्रसाद भट्ट र नेपाल पत्रकार महासंघ उपत्यका प्रदेश समितिका कोषाध्यक्ष संजीप घिमिरे शुभचिन्तकले

बाँकी पेज ७ मा

# बिस्थापित चेपाङहरुको समस्या जहाँको त्यहीं




काठमाडौं । कुसुमखोलाबाट बिस्थापित आदिवासी चेपाङहरुको समस्या विकराल रहेको एक अध्ययन प्रतिवेदनले देखाएको छ । बनजंगलमा आश्रित चेपाङहरुले भोगिरहेको समस्यामा आस्वासन बाहेक उनीहरुको उत्थानमा कुनै काम नभएको अध्ययनमा उल्लेख छ । राजधानीमा आयोजित कुसुमखोलाबाट विस्थापितहरुको पिडाः एक मामिला अध्ययन प्रतिवेदन मस्यौदा माथि परामर्श कार्यक्रममा मानवअधिकार आयोगका किरण बरामले कुसुमखोलाबाट बिस्थापित भएका चेपाङहरुको बारेमा अध्ययन गरेको कुसुमखोलाबाट बिस्थापितहरुको पिडाः एक मामिला अध्ययन प्रतिवेदनका विषयमा प्रस्तुती राखेको थियो ।

चितवनको माडी नगरपालिका वडा नम्बर ९ कुसुमखोलाबाट बिस्थापित चेपाङहरुको विषय अध्ययनटोलीमा शर्मिला प्रजा, कमाला चेपाङ, सावित्रा चेपाङ र किरणकुमार बराम रहेको थियो । उक्त अध्ययन टोलीले तयार पारेको अध्ययन प्रतिवेनमा बनमा आश्रित चेपाङ समुदायको समस्यालाई राज्यले संबोधन गर्न नसकेको उल्लेख छ । आदिवासी चेपाङ साथै चेपाङ महिला, किशोरी र बालबालिकाको अवस्था निकै नाजुक रहेको पनि प्रतिवेदनमा उल्लेख छ । परवीखोलामा बसोबास गरिरहेका चेपाङहरुको सुरक्षित गाँस, आवास, शिक्षा, आधारभुत जिविकोर्पाजनको अवस्थापनि पुरा हुन नसकेको अवस्था छ । मानव अधिकारका किरण बरामले उक्त प्रतिवेदनको विषयमा प्रस्तुती राख्दै तत्काल स्वच्छ खानेपानी आपूर्तिको व्यवस्था, बस्ती सुरक्षा, विपद् पूर्वतयारी र घरको छानो छाउन जस्तापाता वितरणको कार्य गर्न आवश्यक रहेको बताए ।

सोही अवसरमा नेपाल चेपाङ महिला संघको आयोजनामा भएको कार्यक्रममा संविधान सभा सदस्य तथा नेपाल चेपाङ संघका अध्यक्ष गोबिन्द राम चेपाङले कुसुमखोलाबाट बिस्थापित चेपाङहरुको अवस्था

बाँकी पेज ५ मा


थिमिTIMES

# अलाइभ मन्टेश्वरी प्रि–प्राइमरी स्कूलको ७ औं वार्षिक उत्सव तथा अभिभावक दिवस सम्पन्न



भक्तपुर । मध्यपुर थिमिको वडा नं. ५ निकोसेरा स्थित अलाइभ मन्टेश्वरी प्रि प्राइमरी स्कूलले आफ्नो ७ औं वार्षिक उत्सव, अभिभावक दिवस तथा दिक्षान्त कार्यक्रम सम्पन्न गरेको छ ।

कार्यक्रम त्रिवि शिक्षा विभागका प्रमुख प्रो. डा. शम्भु प्रसाद खतिवडाले पानसमा दिप प्रज्वलन गर्दै उद्घाटन गरेको थियो भने कार्यक्रमको सभापतित्व विद्यालयका संस्थापक तथा प्रमुख निर्देशक राकेश सुवालको सभापतित्वमा भएको थियो ।

कार्यक्रममा विद्यालयमा अध्ययनरत नानीबाबुहरुले जीवनपयोगी क्रियाकलापका साथै मनमोहक रुपमा नाच, सांस्कृतिक झाँकी, गायन तथा नाटकको समेत मञ्जन गरेर अभिभावक तथा अतिथिहरुको मन जितेका थिए । त्यस्तै कार्यक्रममा उसु अन्तर्गत आत्मरक्षा सम्वन्धी कलासमेत नानीबाबुहरुबाट प्रस्तुत गरेको थियो ।

कार्यक्रममा त्रिवि शिक्षा विभागका प्रमुख तथा प्रमुख अतिथि प्रा. डा. खतिवडाले साना नानीबाबुहरुबाटै त्रिविको उच्च शिक्षा प्राप्त गर्न आउने भोलीका बिद्यार्थीहरुमा आजको आधुनिक मन्टेश्वरी शिक्षा प्रणाली बर्तमान अवस्थामा आवश्यक रहेको धारणा व्यक्त गर्दै विद्यालयले नानीबाबुहरुको अध्यापनमा बिद्यालय, शिक्षक शिक्षिका तथा विद्यालय व्यवस्थापनको कार्यको सह्रानासमेत गरे ।

त्यस्तै विद्यालयका निर्देशक अनिला सिन्ताकलले स्कूलले आउँदा दिनहरुमा अध्यापन कार्यलाई आधुनिक डिजिटल प्रविधिसँग जोड्दै लाने र आफ्ना नानीबाबुहरुलाई अभिभावकको जीवनवयोगीसँग जोड्न अभिभावकबाटै समयानूकुल विद्यालयमा आमन्त्रण गरी एक आधा घण्टा अध्यापनमा सहयोगी भूमिकाको व्यवस्था गर्ने साच रहेको पनि कार्यक्रममा जानकारी दिइन् ।

त्यस्तै मन्टेश्वरी शिक्षाका प्रशिक्षकसमेत रहेका तुल्सीहरी प्रजापतिले नानीबाबुहरुको प्रारम्भिक शिक्षामा मन्टेश्वरीको योगदानमा अभिभावकको भूमिका र घरको बालमैत्री वातावरण पनि आवश्यक रहेको बिचार व्यक्त गरे । त्यस्तै कार्यक्रममा संस्कृति विशेषज्ञ डा. निर्मला पोखरेललगायतले विद्यालयको कार्यको प्रशंसा गर्दै मन्तव्य व्यक्त गरेका थिए ।

मध्यपुर थिमिको थिमि बैंक्वेटमा सम्पन्न भएको कार्यक्रमको सहजिकरण प्रविका सिन्ताकल र विद्यालयका निर्देशक अनिला सिन्ताकलले गरेका थिए ।

# “पाई डे” को अवसरमा (Pi Recitation) प्रतियोगिता




भक्तपुर । विनायक शिक्षा निकेतनमा विनायक म्याथ क्लबद्वारा आयोजित पाई डे (एष म्बथ) को अवसरमा एष च्भअष्तबतष्यल प्रतियोगिता तथा सुडोकु प्रतियोगिता सम्पन्न भएको छ । गणितको महत्वपूर्ण स्थिराङ्क पाई (ϖ ≈ ३.१४१५९) को महत्व दर्शाउन आयोजित यस कार्यक्रमले विद्यार्थीहरूमा गणितप्रतिको रुचि र लगावमा थप प्रोत्साहन बढाएको छ ।

एष च्भअष्तबतष्यल प्रतियोगितामा उत्कृष्ट स्थान प्राप्त गर्ने विद्यार्थीहरूमा पहिलो कक्षा ७ का तुलज प्रजापति दोस्रो कक्षा ९ की अमृता गोले र तेस्रो कक्षा ७ की षष्ठिका बरूवाल हुन सफल भए । त्यसै गरी सुडोकु प्रतियोगितामा पहिलो कक्षा ९ की सुजिना कुम्पाख, दोस्रो कक्षा ९ कै कृषा प्रजापति हुन सफल भएका थिए ।

कार्यक्रममा अतिरिक्त गणित शिक्षक श्री नरेन्द्र प्रजापतिले पाईको महत्वबारे प्रेरणादायी मन्तव्य दिदै भने, “पाई अंक गणितीय कौशल मात्र होइन, ज्ञानको अनन्तता र अनुसन्धानको उत्साहको प्रतीक हो ।”

विद्यालय इञ्चार्ज शैलेन्द्र भट्टराईले पनि कार्यक्रमको प्रशंसा गर्दै यस्ता गतिविधिहरूले विद्यार्थीको बौद्धिक क्षमता उजागर गर्न मद्दत गर्ने बताएको कार्यक्रमको सञ्चालन कक्षा ९ की टिका मगर र अनुष्का श्रेष्ठले प्रभावशाली ढंगले गरेको थियो ।

समापन समारोहमा उप-प्राचार्य प्रेम प्रसाद निरौलाज्यूले विजेताहरूलाई ट्रफी वितरण गरेको थियो भने उनले पाईको प्रयोग विज्ञान, प्रविधि, इन्जिनियरिङ, र गणनामा महत्वपूर्ण भूमिका खेल्ने उल्लेख गरे । विनायक म्याथ्स क्लबले आगामी दिनमा पनि यस्ता बौद्धिक कार्यक्रमहरू आयोजना गर्दै जाने प्रतिबद्धता व्यक्त गरेको छ ।

# सिद्धार्थले दियो सदस्यलाई वित्तीय साक्षरता तालिम

मध्यपुर थिमि। सिद्धार्थ बचत तथा ऋण सहकारी संस्था लि.को शिक्षा उप-समितिका आयोजनामा संस्थाका सदस्यहरूलाई वित्तीय साक्षरता प्रदान गर्ने तथा शुभकामना आदान प्रदान कार्यक्रम सम्पन्न गरेको छ।

संस्थाका अध्यक्ष राजेश श्रेष्ठको सभपतित्वमा भएको कार्यक्रमको मध्यपुर थिमि नगरपालिकाका वडा नं. ४ का वडा अध्यक्ष बाल कृष्ण श्रेष्ठले उद्घाटन गरेको थियो।

भक्तपुर जिल्ला बचत तथा ऋण सहकारी संस्थाका व्यवस्थापक बाल कृष्ण धोजुले संस्थाका सदस्यहरुलाई वित्तीय साक्षरता सम्वन्धी अभिमुखिकरण प्रशिक्षण दिइएको थियो। कायक्रमको सहजिकरण शिक्षा उपसमितिका संयोजक तुल्सीराम श्रेष्ठले गरेको थियो भने स्वागत मन्तव्य संस्थाका उपाध्यक्ष इन्द्रकृष्ण श्रेष्ठले गरेको थियो। कार्यक्रम शंखधरचोक स्थित यचु पार्टी भेन्युमा भएको थियो।

# जय सिद्धिकालीको दन्त शिविर सम्पन्न




मध्यपुर थिमि। सिद्धिकाली मन्दिर परिसरमा कार्यालय स्थापना गरी आफ्ना सदस्यहरु माफ वित्तीय कारोवार गर्दै आएको जय सिद्धिकाली बहुउद्देश्यीय सहकारी संस्था लि.ले सामाजिक उत्तरदायित्व अन्तर्गत शनिबार आफ्ना सदस्यहरु तथा मन्दिर परिक्रमा गर्न आउने भक्तजनहरु तथा स्थानीय श्रद्धालुहरुलाई लक्षित गर्दै दन्त स्वास्थ्य शिविर कार्यक्रमको आयोजना गरेको छ जसमा २५० जना भन्दा बढीले स्वास्थ्य लाभ लिएको थियो भने शिविरलाई प्राविधिक सहयोग निलबाराही डेन्टल होम प्रा. लि. का डा. अनिल चक्रधर लगायतका स्वस्थ्यकर्मीहरुको टिमले सहजिकरण गरेको अध्यक्ष अष्ट प्रजापतिले जानकारी दिए। अध्यक्ष प्रजापतिले संस्थाले सामाजिक उत्तरदायित्व अन्तर्गत आफ्ना सदस्यहरु र मन्दिर परिसर परिक्रमा गर्न आउने भक्तजनहरु, जेष्ठ नागरिक र स्थानीयको स्वास्थ्य लगायतका कार्यहरुमा संस्थाले आवश्यक सेवा दिइ आएको र आगामी दिनमा संस्थाको सहयोग निरन्तर रहने जानकारी दिएका छन्।

# ललितपुरका व्यवसायीहरुलाई भाषण कला सम्बन्धी तालिम




ललितपुर। सिलाई तथा कपडा व्यवसायीहरुलाई लक्षित गर्दै क्षमता अभिवृद्धि तालिम सम्पन्न भएको छ। व्यवसायीहरुलाई सिलसिला मिलाएर बोल्ने शैली, औपचारिक कार्यक्रम सञ्चालन गर्ने विधि र भाषण कला सम्बन्धी चारदिने तालिम ललितपुर कपडा तथा सिलाई व्यवसायी संघको समन्वयमा दिइएको हो।

तालिम समापन कार्यक्रममा मन्तव्य राख्ने क्रममा ललितपुर महानगरपालिका वडा नं. ६ का वडाध्यक्ष रुपेन्द्र राज शाक्यले बोल्ने शैलीको विकास अनिवार्य सर्त रहेको दाबी गरे। 'जुनसुकै पेशा व्यवसायमा आवद्ध रहेका मान्छेलाई व्यक्तित्व विकास गर्नमा बोलीले साथ दिन्छ। विद्यार्थीहरुको प्रेजेन्टेसनदेखि सीप सिकेका दिदीबहिनीहरुको व्यवसाय राम्रो बनाउन पनि सहि तरिकाले ग्राहकसँग व्यवहार गर्नुपर्छ।' शाक्यको भनाइ थियो।

हुन पनि सिलासिला मिलाएर, प्रभावकारी ढंगले आकर्षक तरिकाले बोल्नेहरुको व्यवसाय फस्टाएको देखिन्छ। सीप जानेका उद्यमी र व्यवसायीहरुको उद्यमशीलता विकास गर्नमा समेत बोलीको भूमिका रहन्छ। त्यस्तै, संघका अध्यक्ष प्रेम महर्जनले जिल्लामा सक्रिय रहेका व्यवसायीहरुको क्षमता अभिवृद्धि गर्नको लागि उद्घोषण तथा आकर्षक ढंगले बोल्ने शैलीको तालिम दिइएको बताए। सीप जानेर पनि प्रगती गर्न गाह्रो भइरहेका व्यवसायीहरुको लागि तालिम कार्यक्रमले सहयोग गर्नेमा विश्वास व्यक्त गरे। चैतको तेस्रो हप्तादेखि लगनखेलमा आयोजित कार्यक्रमलाई सञ्चारकर्मी केके मानन्धरले प्रशिक्षण दिएको थियो।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### विश्वमा देशको छवि बिग्रनबाट रोक्न सरकार उदासीन !

काठमाडौं उपत्यकामा रहेको नेपाल मन्दल विश्वकै सुन्दर मानव बस्तीको रुपमा चिनिएको स्थान हो । यहाँ बिश्व सम्पदा सूचीमा सुचिकृत सम्पदाहरु धेरै रहेको छन् । ती सम्पदा अवलोकनका लागि नै विश्वका पर्यटकहरुको रोजाईमा नेपाल मन्दल पर्दै आएको छ । साथै यो नेवा समुदायको बसोवास रहेको स्थल पनि हो । त्यस कारण पनि नेपालको मौलिक एवं एतिहासिक जात्रा पर्वहरु शुरु हुने यो समयमा यी साँस्कृतिक सम्पदाहरुलाई प्रभाव पार्ने गरी राजनीतिक दल, संघ संस्थाहरुले राजधानी केन्द्रित आन्दोलन थालेका छन् । जसले नेपाल मन्दललाई अशान्त क्षेत्रको रुपमा चित्रित गर्ने कार्य भइरहेको छ ।

यस्तै गत चैत्र १५ गते नेवाहरुको पर्व पाहाँचह्रेकै दिन पारेर आन्दोलनका क्रममा २ जना नेवाहरुले जीवन गुमाए भने आगजनी र लुटपाटको घटनाका कारण राजधानी अशान्त बन्न पुग्यो । तर सत्तामा रहेका र सत्ता बाहिर रहेका राजनीतिक दलहरुले विरोधको नाममा बिरोध गर्ने बाहेका आम जनताको असन्तुष्टीको विषयमा कुनै सम्बोधन गर्ने कार्य गरेन ।

यही क्रममा नेवाहरुको यस भूमिमा काठमाडौंको अर्को प्रमुख देवता सेतो मछिन्द्रनाथको रथायात्रा शुरु भएको छ भने केही दिन पछि नयाँ वर्षको शुरुआतसँगै भक्तपुर लगायत नेपाल मन्दलका धेरै जसो स्थानमा बिस्का जात्रा र खट जात्रा प्रारम्भ हुने लहरमा रहेको छ भने त्यस लगतै नेपालकै लामो जात्राको रुपमा रहेको रातो मन्छिन्द्रनाथको रथ यात्रा शूरु हुने क्रममा रहेको छ । यीने नेपाल र नेपालीको पहिचानको रुपमा रहेको सम्पदाहरुलाई प्रभाव पार्ने गरी हुन लागेको राजधानी केन्द्रित विरोधका कारण आगामी दिनमा देशको अर्थतन्त्रको मेरुदण्डको रुपमा रहको बैदेशिक पर्यटन क्षेत्र प्रभावित हुने देखिन्छ । यस तर्फ राज्यसत्तामा रहेका सरोकारवालाहरुको ध्यान जानु अति आवश्यक छ ।

त्यस्तै अहिले यो नेपाल मन्दल मानव बसोवासकै लागि 'अस्वस्थकर' मानिन थालेको छन् । 'वायु गुणस्तर सूचकांक' अनुसार उपत्यकाको वायु सास फेर्नै नहुनेगरी बिखालु रहेको देखिन्छ । काठमाडौं उपत्यका विश्वकै प्रदूषित स्थानमा पर्दैआएको केही वर्षै भइसकेको छ । हिउँदे झरी नपर्नेबित्तिकै उपत्यकाको हावा सासै फेर्न नहुने हदसम्म बिखालु हुनेगरेको छ । मूलतः मानवीय हेलचेक्र्याइँकै कारण यहाँको हावा प्रदूषित हुने गर्छ भने उपत्यकाको कचौरा आकारले गर्दा हुरी नचल्दासम्म यही रुमल्लिइरहन्छ ।

उपत्यकाको भूबनोट त बदल्न सकिँदैन । अर्थात्, यहाँको वायु प्रदूषित भएपछि सितिमित बाहिर जाँदैन । अहिलेसम्म नेपालमा पानी पार्ने प्रविधि भित्र्याइएको छैन भने हावा चलाउने यन्त्र पनि जडान भएको छैन । अर्कातिर, यस्ता कृत्रिम उपाय निकै खर्चिला भए पनि दिगो र प्रभावकारी हुँदैनन् ।

काठमाडौं उपत्यकाको वायु कति प्रदूषित छ भन्ने जानकारी यहाँ आउनेमात्र होइन आउन चाहने पर्यटकहरूले पनि राख्छन् । अन्तर्राष्ट्रिय सञ्चार माध्यममा समेत नेपालको वायु प्रदूषणको समाचार आउन थालेका छन् । श्वासप्रश्वासको गम्भीर बिरामीहरू त उपत्यकामा आउने आँट नै गर्दैनन् होला ।

वायु प्रदूषणको स्तर निकै खराब भएपछि बैठक बस्ने र उपायहरू सुझाउने अभ्यास पनि सरकारी कर्मकाण्डै बनिसकेको छ । हुरी वा झरीले प्रदूषण अलि कम हुनेबित्तिकै सबैले तिनलाई बिर्सने गरेका छन् । धेरैपटक सवारी साधनको नियमन, निर्माण कार्यमा अनुगमनलगायतका सुझावहरू सरकारलाई दिइए पनि कार्यान्वयन भएका छैनन् । यसैले धेरै ठूलो महत्त्वाकांक्षा नराखी जे गर्ने हो, जति गर्न सकिन्छ त्यसलाई इमानदारीपूर्वक सम्पन्न गरेर जनताको स्वास्थ्यका साथै बिश्वमा उपत्यकांको छवि बिग्रनबाट रोक्नु आवश्यक छ । अन्यथा, जनस्वास्थ्यको भयावह सङ्कटका साथै पर्यटन व्यवसायले पनि वायु प्रदूषणको प्रकोपको सामना गर्नुपर्ने हुनसक्छ ।

# लिम्बुवानका मुन्धुमी सम्पदाको नालीबेली–३

● *अमित थेबे 'मिहाङ'*

पछिल्लो समय ६० को दशकदेखि केही फरक सोच भएका नयाँ पुस्तामा मुन्धुम भित्र बर्णन गरिएका आदिम पात्रहरुले दैनिक जीवन यापन गरेका स्थलहरू कहाँ पर्छ भनेर सामान्य बहस सुरु गरे । यो बहसलाई आइत खजुम र अर्जुनबाबु माबुहाङ जस्ता युवाहरुले मुन्धुममा वर्णित स्थल पहिचान गर्ने अभियान चलाए ।

हजारौं वर्ष अघिको मुन्धुममा वर्णित पात्रहरुले जीवन यापन गरेको स्थल काल्पनिक नभएर सबैभन्दा बढी त ताप्लेजुङको तमोर र काबेली नदी सेरोफेरोमै रहेको विस्तारै पुष्टि हुँदै आयो । धन्न ताप्लेजुङका स्थानीय याक्थुङ लिम्बु र गैर याक्थुङ लिम्बु बुढापाकाहरुले ती स्थानका नाम अहिले पनि जस्ताको तस्तै सम्बोधन गर्दै आएका रहेछन् ।

मुन्धुममा वर्णित आदिम स्त्री पात्र मुजिङ्ना खेयोङ्ना, उनको छोरा सुसुवेन लालावेन, सुसुवेन लालावेनका चार श्रीमतिहरु जुनबेला विवाह संस्कार स्थापित नभए पनि यौन सम्पर्क गरेका स्त्रीहरु थोसुलुङ्मा फियमलुङ्मा, योसुलुङ्मा मुक्कुमलुङ्मा र उनीहरुका सुसारेहरु, थोसुलुङ्मा पट्टीको छोरा सुच्छुरु सुहाम्फेवा, योसुलुङ्मा पट्टिको छोरी लाहादङ्ना र दुई सुसारेहरुबाट जन्मेका छोराहरु लिङ्दाङखेवा र साङ्दाङखेवाहरुले शिकार गरेर जीविका चलाएकोदेखि विपरित लिङ्गीसंग यौनसम्पर्क गरेको स्थान हालको फक्ताङलुङ गाउपालिकाको सांगुयक कोप्पियक, मुरिङला खारिङ्ला तेम्बे, छिरुवानी, थोकपुन तेम्बे, पिप्पुधापमै पर्छ ।

सुहाम्फेवा र लाहाङ्दनाबीच पहिलो पटक भेट भएको तुम्दुम्सो लालासो भन्ने ठाउँ मुरिङ्ला खरिङ्ला डाँडाको पश्चिम तर्फ पर्छ भने पहिलो पटक संसर्ग गर्दा हल्लिएको ढुङ्गा काइलुङधुङ साविक लेलेपको गोवाटारमा पर्छ । तमोर किनारमा रहेको काइलुङ लुङधुङ(संसर्ग भएको विशाल ढुङ्गा)मा सुत्दा वा उभिँदा अहिले पनि हल्लिन्छ ।

यस्तै बाघ प्रवृत्तिको एक भाइ छोरा केसामी र मानवीय गुण भएको एक भाइ नामसामीगरी दुइ भाइ जुम्ल्याहा छोरा जन्माउने आमा इप्ना सरेधङ्ना (तुम्याहाङ लक्ष्मण मेन्याङ्बोले नामसामी केसामीको आमा खाप्पुना मेल्लङ्नामा पनि भनेका छन्) र दुई दाजुभाइ (पशुत्व र मनुष्यत्व) बीच युद्ध भएको स्थान नामसामीलुङ केसामीलुङ साविक थेचम्बु र नाङखोल्याङको माझमा पर्छ । सिमलको रुख चढेर तीर हानी हिंस्रक दाजुलाई मारेको स्थान साविक नाङखोल्याङको पुच्छर काबेली नदी नजिक सुभेवामा पर्छ । हाल यो स्थान पाथिभरा याङवरक गाउँपालिकाभित्र समेटिएको छ ।

मुन्धुममा वर्णन भएअनुसार पाजाइ तेन्दुम्याङ र लुप्लिनामा अदन्ना र पोङ्लिसो अयासक्पा र आङ्गुरी शशीहाङ्मा बीच विवाह गर्ने टुंगो हुनु अगाडि तौलिएको मेन्तुरी नेम्पासाङ्गा साविक लेलेपमा पर्छ । यो तुलो हो । हाल तुलोको रुपमा करिब आठ फुट अग्लो ढुङ्गा अवशेषको रुपमा रहेको छ ।

आदिम स्त्री मुजिङ्ना खेयोङ्ना बयस्क भएपछि संसर्गका लागि आव्हान गर्दै तन्नेरी पुरुष खोज्दै जाँदा रुखको कापमा बसेर सुसेली हाल्दा गोप्य अङ्गमा हावा छिरेर तृप्ति पाएको सुरितथाङ केजङ डाँडा हाल लेलेप साँघुको तल्लो बेल्टमा पर्छ ।

च्याब्रुङ याक्थुङ लिम्बुको मौलिक बाजा हो । यो बाजा बनाएर बज्छ, बज्दैन भनेर पहिलो पटक हङसिङ रुख काटेर भित्र खोली दुईतिर गोरुको छाला मोरेर छालाकै डोरीले तन्काएको स्थान काम्भिलाङ पनि साविक लेलेपमा छँदैछ ।

हालको फक्ताङलुङ गाउँपालिकाको विप्पुधापतिर मेन्दुरीपासाङ्मा छ । बेहुलाबेहुली तौलने त्यो ढुङ्गाको तुलोको एक भाग अझै त्यहीँ छ । विवाह संस्कारको नीति बनेसँगै घर निर्माण सम्बन्धी ज्ञान प्राप्त गरे । सोही गाउँपालिकाको तापेथोक पारी सांगुयक कोप्पीयकमै घर निर्माणको कथा जोडिन्छ ।

गर्भवती अवस्थामा आमा र गर्भको बच्चाको हितमा गर्नुपर्ने कर्मकाण्डहरु (साप्पोक चमेन मुन्धुम) तयार भए । समाज र परिवारकै सदस्यबीच हुने रिस, इर्ष्या, आँखीडाहीका विषयमा नीति तय भए । प्राकृतिक र अप्राकृतिक रुपमा मरिमराउ हुनेहरुको बारेमा फरकफरक अत्येष्टी गर्ने संस्कारहरु तयार भए । प्राकृतिक विपत्ति र अग्रज पूर्वजको गालीसराप नलागोस् भन्नका लागि 'वादेम्मा'को सुरुआत भयो ।

याक्थुङ लिम्बुहरुले आदिमकालमा पहिलो पटक वादेम्मा (गालीसराप) बगाएको खोलालाई नुक्वा खोला भनेर चिनिन्छ जुन युखावुमा अझै बगिरहेको छ ।

आदिम पुर्खा तेत्लारा लाभियङ्मा (स्त्री)को मृत्युपछि उनका छोराहरु लाकेरेक र नाम केरेक (लुङजेकहाङ र सिङजेकहाङ)ले ओढारमा छाडेर फर्के तर चित्त नबुझेपछि एउटा विधि अपनाएर फेरि चेधाप (शव राख्ने खट) बनाए । मौलिक र मौखिक नीति संस्कार जान्ने अगुवा नावारा उसुक साम्बालाई बोलाएर खाम इङ्मा (चिहान स्थलमा शव गाड्न प्रकृतिसँग अनुरोध गर्ने विधि) अनुसार डाँडामा पुरे । अनि खाउमा-फराक्लो गरे । तेत्लारा लाभियङ्मालाई राखिएको ओढारलाई मुन्धुममा चेजिङ फुक्कु भनिन्छ । त्यो ओढार अझै छ । त्यहाँभित्र कम्तीमा ३५ जना बढी मानिस अटाउन सक्छन् । जुन युखावुकै भएर बग्ने तमोरको किनारमा पर्छ । याक्थुङ लिम्बुले पहिलो पटक खाउमा फराक्लो गरेको खाओलुङ मुरिङला खारिङ्ला डाँडासँगै छ ।

सूचीकरणमा मुन्धुमी स्थल

याक्थुङ समुदायको मौलिकता र आदिम साँस्कृतिक जीवनपद्धतिका लागि सक्रिय संस्था युमा साम्यो महासभाले समेत केही वर्षअघि प्रदेश एकको सरकारलाई मुन्धुमी स्थलहरूको संरक्षणका लागि परियोजनामार्फत् सूचीकरण र संरक्षण गर्ने प्रस्तवा गरेको थियो । परियोजनाको कार्यक्षेत्र नौ जिल्लाहरू(ताप्लेजुङ, संखुवासभा, धनकुटा, तेह्रथुम, पान्थर, इलाम, झापा, मोरङ र सुनसरी) पर्दछन् ।

ती जिल्लाहरूमा निम्न अनुसारका धार्मिक, साँस्कृतिक, ऐतिहासिक, पुरातात्विक महत्वका सम्पदाहरू परियोजनाले समेट्ने उल्लेख गरेको थियो ।

१. पारुङ मारुङलूङ, २. सावान पाङ्भे, ३. थाप्लाङ, ४. थोक्पुन तेम्बे(थोक्चङ), ५. खोङ्सोलुङजङ, ६. लुङइक्वा, ७. खियाजङ, ८. पित्थोसा वरक, ९. सु?लुम्बुङ, १०. सिबेवा, ११. साँगो, १२. मुरिङ्ला खारिङ्ला तेम्बे, १३. खोङ्लिसो तेम्बे, १४. सःसिक् फुक्कु, १५. माङ्यक, १६. लोक्फादेन हाङ्फादेन, १७. नेन्दुरी पासाङगा, १८. निङखुरी फुक्कु, १९. सोधुहाङ लेप्मुहाङ फुक्कु, २०. लेप्चुङ, २१. लुङधुङ, २२. ओमुलुङजङ(रमिते ढुंगो), २३. खाउलुङजङ(शुद्धी गरेको ढुंगो), २४. लाङदेवा वहङ, २५. केखिङतेन्, २६. केक्तुरा फङदुरा, २७. केकेसा?लुङ नाम्सा?लुङ, २८. खाम्बुचङ, २९. मेन्छ्यायेम थेगु, ३०. सेहोनाम्लाङ, ३१. सावानेपा(साङ्वानेवा) वरक, ३२. थरगत/वंशगत माङगेन्ना यकहरू, ३३. माङयुक्नाहरू, ३४. पेन्बेनलुङ फक्ताङलुङ, ३५. तिम्बुङ वरक, ३६. ताप्के वरक, ३७. निगुरादेन, ३८. साप्चङमा, ३९. कुम्मायक कुस्सायक, ४०. साम्लो लुङधुङ, ४१. पान्दोलुङ, ४२. मित्लुङ, ४३. इङलेक्मादेन, ४४. याक्पेली सबेल्लीसिङ, ४५. मेल्लङ तेम्बे, ४६. युमिक्बा वरक, ४७. सोदो वरक, ४८. सिरिजङ्गा फुक्कु, ४९. सुम्दाङ लुङ, ५०. वागुवा वरक, ५१. नाम्लाङ, ५२. वाफेलुङ, ५३. युमा वरक(युमाले उमारेको पानी), ५४. हाङसेम्मालुङ, ५५. थाकखिलुङ, ५६. थाक थाक्मादेन, ५७. थाक्खिवरक, ५८. सिन्धोलुङ वसाङलुङ/वसाङलुङ पयङलुङ, ५९. याभुत्लुङ फावामा, ६०. साम्माङ खाः/साम्माङ खुः, ६१. मुराहाङ, ६२. सुहा?लुङ, ६३. अदोफुक(मुजिङना खेयोङना दबिएर गएको ठाउँ), ६४. सेवाङ तेम्बे-सेवाङफुको(सुसुवेङ लालावेङ जन्मिएको ठाउँ), ६५. खर्बाथक, ६६. लुङसुम्बाङ, ६७. फाक्सालुङ, ६८. पदकलुङ, ६९. काङवान युङवाना यङघङ, ७०. खाम्बु?लिङ नाहाङ्मा यक, ७१. मिक्लाजोङ, ७२. ताङ्गे?लुङ, ७३. मावरक पावरक, ७४. हाम्बेकहाङ फुक्कु, ७५. तुङदुङे साम्माङ फुक्कु, ७६. साम्सिङ्गो, ७७. थालाचेप्पा, ७८. मुयालुङ, ७९. येमासेन, ८०. येमाचेप्पा लुङ, ८१. पित्तोनदेन, ८२. चेग्रा, ८३. मेयङलुङ, ८४. कान्दया पप्पा, ८५. याक्वावरक(विजयपुर), ८६. साराङ यक, ८७. थाङसामा वरक, ८८. पोरोक्मी यम्भामी फुक्कु, ८९. केबावा, ९०. सेगेक् सुरुङमा, ९१. हाङ चुम्लुङ, ९२. फचङमादेन, ९३. येत्चेङमा, ९४. तुम्फुङला(कानायङवा मारिएको ठाउँ), ९५. केप्चेबुङ (तुङदुङङेको च्याब्रुङ रहेको ठाउँ), ९६. कोम्भा, ९७. मेन्धुप्पा सङ्गम्बो(सिसाङ्वा र हाङसाङवाको बीचमा अवस्थित केवाफुङ साम्लो गरेको ठाउँ), ९८. इसाङलुङ फालेलुङ आदि ।

त्यस्तै, युमासँग सम्बन्धितहरूमध्ये -

९९. किङगिङलुङ, १००. नियारा यक्चेयक, १०१. थाक्सिबोमा, १०२. ताङगेलुङ, १०३. याःसक, १०४. युमा वाधाम्, १०५. थाक्केलुङ, १०६. थाक्केचोक, १०७. युमायुक्ना, १०८. थाक्केसिङमा लगायत ५०० बढी स्थलहरूको समेत संरक्षण, सम्वर्धन एवम् विकासका लागि आवश्यक कार्यहरू गरिने महासभाले परियोजनामा उल्लेख गरेको थियो ।

ऐतिहासिक एवम् पुरातात्विक सम्पदा

लिम्बुवानको ऐतिहासिक एवम् पुरातात्विक सम्पदामा विशेषतः याक्थुङ इतिहासका आधुनिककालका संरचनाहरू पर्छन् । सावा येत्हाङकालका आठ शक्तिशाली शाषकहरू येत्हाङमा ताप्पेसो लुङमाहाङ, सगहिम्सो सङ्गिमहाङ, नियारा थक्चङहाङ, लालासो पाङबेन्हाङ, खेच्चुवत् उप्पनहाङ, साउन्दु उन्दुहाङ, साङ्गेन्हाङ पाङ्गेन्हाङ, सेन्छेरे सेनिहाङका गढीहरू यसमा पर्छन् ।

येत्हाङपछि थिवोङ याक्थुङ(दश लिम्बु)हरू साप्लुप्लि साम्बाहाङ(तम्बरखोला थुम), सिसेयेन्सिरेङहाङ(मिवा/मैवालखोलाथुम), थक्थक्सो आङवोहाङ(आठराई थुम), थिन्दोलुङ खो?याहाङ(याङरुप थुम), इङासो पापोहाङ(पान्थर थुम), सेन्सेन्गुम फेदापहाङ(फेदाप थुम), इमेहाङ(चारखोल थुम), सोइयाक लादोहाङ(चौबिस थुम), ताप्पेसो पेरुहाङ(तेह्रथुम/थला यक) र ताक्लुङ खजुमहाङ(छथर थुम)का गढी या किल्लाहरू सबै सम्पदामा पर्छन् ।

यिनीहरू प्रागऐतिहासिक महत्वका सम्पदा र स्थलहरू हुन् । यसैगरी, तिल्लिङजङ्ग मुबेरुहाङको तिल्लिङटार, छथरका आपेङ राजाको यक्, इम्बिरी याङ्धाङ्वा क्षेत्रका खेदुवाहाङ, याङलिगेकहाङ, साङदुम्बे र वाङदुम्बेका इलाका, धनकुटा बुद्धिमोरङ(साँगुरीगढी गाउँपालिका)का मरङहाङ राजा बस्ने चेघ्रा यक, चेघ्रादेखि पश्चिमको चक्रक डाँडा(सुलिकोट), पापोहाङको यक(आठराई) र नेम्बाङ राजा पाथोङहाङलाई अपदस्त गर्दै राज गरेको गढी एवम् पापो, थेगिम र नेम्बाङहरूको नाहाङ्मा यक् (फेदेन), चुक्निबा र लात्तिबा पुख्यौली थलो इधुङयक नाम्फुनयक्, हाङथक्वा, इलामको आङदाङ गढी, खेबाङका लेच्छेहाङ खेच्छेहाङ राजाका दरबार, हिरिङकाजी राजाले दोषीहरूलाई कुटेर मार्ने तावालुङ, मिक्वाखोलका पोरिहाङको ढुङ्गे दरबार आदि पनि यहीँ कालका सम्पदामा पर्छन् ।

याङरुपका प्रतापी राजा हिल्लिहाङ योङहाङको दरबार, विजयपुरका विजयनारान राय लिम्बुले स्थापना गरेको विजयपुर दरबार पनि सम्पदाका रूपमा लिन सकिन्छ । उनीहरू थिवोङ याक्थुङकै उत्तराधिकारीहरू पनि हुन् । यसैगरी, संखुवासभाको बाह्रबिसे बजार जहाँ लिम्बुवानका सरदार काङ्सोरे र गोर्खाली सरदार रघु रानाबीच युद्ध भएको थियो ।

सिद्धिपुर गढीस्थित योद्धाहरूले आफ्ना हतियार धार लगाएको विशाल ढुंगा, चैनपुर गढी, छथरस्थित खेवाको ताक्लुङ गढी, फेदापमा ताप्पेसो पेरुहाङको गढीको अवशेष, सुम्जिरी सुम्हा?लुङ, मावर पावरक, राजा ओझाहाङको दरबारलाई सूचीकृत गर्न सकिन्छ । यसैगरी, सिरिजङगा लिपिका आविष्कारक, विकासकर्ता र प्रचारक सिरिजङ्गा सिं थेबेसँग सम्बन्धित रहेका ओढार, ढुङ्गा, खेत आदिलाई पनि ऐतिहासिक स्थलका रूपमा संरक्षण गर्न सकिन्छ ।

क्रमश......

# अन्तरनगर जिम्नास्टिकमा भक्तपुर प्रथम, मध्यपुर थिमि दोस्रो र चन्द्रागिरी तेस्रो




भक्तपुर । भक्तपुर नगरपालिकाको आयोजनामा चैत्र २३, २४ र २५ गते ३ दिन सम्म सञ्चालन भएको अन्तरनगर जिम्नास्टिक प्रतियोगिताको समापन समारोह तथा पुरस्कार वितरण कार्यक्रम सहिद स्मृति खेलमैदानमा सोमबार एक समारोहबीच सम्पन्न भयो। अन्तर नगर जिम्नास्टिक प्रतियोगितामा भक्तपुर प्रथम, मध्यपुर थिमि दोस्रो र चन्द्रागिरी नगरपालिकाले तेस्रो स्थान हासिल गरेको छ।

कार्यक्रममा नेमकिपाका सचिव एवं संघीय सांसद प्रेम सुवालले खेलकुद स्वास्थ्य, अनुशासन, मित्रता र देशको सार्वभौमिकता रक्षाको निम्ति भएको बताउँदै खेलकुदको माध्यमबाट जोडिएको मित्रतालाई सँधै मजबुत बनाइराख्नुपर्ने बताए।

नागरिकहरु अनुशासित भए मात्र देश समृद्ध हुने बताउँदै उनले नागरिकहरुमा कर्तव्यबोध भएपछि मात्र देश बन्न र समाज व्यवस्थित रुपमा अगाडि बढ्न सघाउ पुग्ने धारणा व्यक्त गरे। खेलाडीहरुले आफ्नो खेल जीवनसँगसँगै विद्यालय र विश्वविद्यालयको शिक्षालाई पनि अगाडि बढाउन सके व्यक्तित्व विकासमा धेरै महत्वपूर्ण भूमिका खेल्ने बताउँदै उनले देशको रक्षाको लागि खेलकुदको भूमिका महत्वपूर्ण हुने बताए।

सांसद सुवालले छिमेकी देश भारतले नेपालका भूभागहरु अतिक्रमण गरिरहेको सन्दर्भ जोड्दै देशको सीमा रक्षा गर्ने नयाँ पुस्ता तयार गर्ने महत्वपूर्ण थलो पनि खेलकुद भएको बताए। जनताको माग सम्बोधन हुने राजनीतिक व्यवस्था समाजवादी गणतन्त्र भएको बताउँदै उनले साम्राज्यवादी देश अमेरिकाले इजरायललाई हतियार बेचेर प्यालेस्टिनी जनतामाथि बर्बर हमला तथा बमबारी गरिरहेको बताए।

भनपाका प्रमुख सुनिल प्रजापतिले प्रत्येक युवालाई कुनै न कुनै खेलकुदमा सहभागी गराउने र खेललाई जीवन पद्धतिको रुपमा विकास गर्ने उद्देश्यले नगरपालिकाले खेलकुद प्रतियोगिताको आयोजनालाई निरन्तरता दिँदै आएको जानकारी दिए। दुई महानगर, एक उपमहानगरसहित नगरपालिकाको सहभागिता रहेको अन्तर नगर प्रतियोगिताले खेलकुद जगतको इतिहासमा एउटा इँटा थप्ने काम भएको प्रमुख प्रजापतिले बताए।

भक्तपुर नगरपालिकाले सरकारको भर नपरी आफ्नै बलबुत्तामा भक्तपुरको विकास गर्ने प्रयास गर्दै आएको बताउँदै उनले देशको सीमाना रक्षा गर्ने र सार्वभौमिकता रक्षा गर्ने नयाँ पुस्ता तयार गर्ने उद्देश्यले खेलकुद क्षेत्रलाई प्राथमिकतामा राखी काम गर्दै आएको बताए।

वाग्मती प्रदेश सभाका सदस्य सृजना सैंजुले जिम्नास्टिक प्रतियोगितामा महिला सहभागिताले उत्साह थपेको बताउँदै भक्तपुर नगरपालिकाले गर्दै आएको खेल गतिविधिले देशको खेलकुद क्षेत्रमा महत्वपूर्ण भूमिका खेलेको बताए।

कार्यक्रममा भक्तपुर जिल्ला जिम्नास्टिक संघका अध्यक्ष दिपककृष्ण प्रजापतिले प्रतियोगिता भव्य रुपमा सफल भएकोमा सरोकारवाला सबैमा हार्दिक आभार व्यक्त गर्दै जिम्नास्टिक प्रतियोगिता आयोजनाले खेलाडीहरुमा उत्साह थपेको बताए। कार्यक्रममा प्रमुख अतिथि सुवालले विजयी खेलाडीहरुलाई प्रमाणपत्र, शिल्ड र नगद पुरस्कार वितरण गरेको थियो भने विशेष अतिथि तथा अतिथिहरुले सहभागी नगरपालिकाहरुलाई मायाको चिनो वितरण र विजयी खेलाडीहरुलाई पुरस्कार वितरण गरेको थियो।

खेलकुद समितिका संयोजक श्यामकृष्ण खत्रीले स्वागत मन्तव्य, प्रमुख प्रशासकीय अधिकृत वसन्त भट्टराईले धन्यवाद मन्तव्य दिएको नगरपालिकाद्वारा आयोजित जिम्नास्टिक प्रतियोगितामा देशका विभिन्न १८ वटा नगरपालिकाहरुले भाग लिएका थिए। उक्त प्रतियोगिता नेपालकै पहिलो प्रतियोगिताको रुपमा भक्तपुर न.पा.ले आयोजना गरेको थियो भने प्रतियोगितामा प्रथम हुने टिमलाई रु. ५० हजार, दोस्रोलाई रु. ३० हजार र तेस्रोलाई रु. २० हजार नगद पुरस्कारको व्यवस्था गरिएको थियो भने सहभागी खेलाडी र अफिसियलहरुलाई खान र बस्नेको व्यवस्था पनि गरेको थियो।



# तेश्रो विश्वयुद्धको त्रास : २५ वर्षसम्म खान मिल्ने मासु र जंगलमा बाँच्न सकिने तालिमको माग



काठमाडौं । बेलायतीहरुले तेश्रो विश्वयुद्धको आशंकालाई लिएर तयारी सुरु गरेका छन् । जसका कारण बेलायतमा बाँच्ने तालिम (सर्भाइबल ट्रेनिङ) को माग ७५ प्रतिशतले बढेको छ । बेलायतमा मानिसहरुले तेश्रो विश्वयुद्धको जोखिमबाट बँच्नका लागि आफूलाई तयार पारिरहेका छन् ।

रुसी राष्ट्रपति भ्लादमिर पुटिनले आणविक बमको एक स्विच थिच्दा हुनसक्ने सम्भावित सर्वनाशकारी विस्फोटबाट आफूलाई बँचाउनका लागि बेलायतीहरुले लामो समयसम्मको खानेकुराको आपूर्तिका साथै कठीन वातावरणका लागि लत्ताकपडा पनि जम्मा गरिरहेका छन् ।

पसलेहरुका अनुसार बेलायतमा वर्षाको पानीलाई पिउन योग्य बनाई शुद्धीकरण गर्ने मेसिनहरुको माग बढेको छ, जसका कारण बजारमा अभाव देखिएको छ । साथै यदि ताजा खाद्य आपूर्ति हुन नसकेमा फ्रिज गरिएका तथा सुकाइएका खाद्य पदार्थहरु पनि बजारमा सकिने अवस्था सिर्जना भएको छ । बजारमा २५ वर्षसम्मलाई चल्ने मासुका डिब्बा, सैन्य स्वासयन्त्र तथा खाद्यान्नका प्याकेटहरु पसलबाट रित्तिइरहेका छन् ।

जंगलमा जीवित रहने कला सिकाउने बुसक्राफ्ट कोर्समा भर्ना हुने मानिसहरुको संख्यामा पछिल्लो २ वर्षमा ७५ प्रतिशतको वृद्धिदर देखिएको छ । इस्ट एंग्लियास्थित 'ब्याक टु वाइल्डरनेस लर्निङ'का संस्थापक रे चिनका अनुसार मानिसहरु वास्तवमा आधारभूत कौशलहरु जस्तै विनाकुनै उपकरण केवल काठलाई एकापसमा रगडेर कसरी आगो बाल्ने भन्ने लगायतका प्राचीन ज्ञान तथा सीपहरु सिक्ने कोसिस गरिरहेका छन् ।

**सर्भाइबल ग्याजेटको बढ्दो बिक्री**

मानिसहरु यस्ता उपकरणमा निर्भर हुन चाहँदैनन् जो छिटै फुट्न वा बिग्रिन सक्छन् । एक बेलायती पूर्व सैनिक लेह प्राइसका अनुसार रुसले पश्चिमा मुलुकहरुविरुद्ध युद्ध छेड्ने सम्भावनाका कारण आपतकालीन अवस्थामा ज्यानको सुरक्षाका लागि चाहिने सरसामानहरु बेच्ने 'बग आउट' पसलहरुको कारोबार तीव्र रुपमा बढेको छ । उनी भन्छन्- तयारीको अर्थ हो आत्मनिर्भरता । यदि तपाईंलाई अचानक जे कुराको आवश्यकता पर्छ त्यो तपाईंसँग छैन भने के होला ?

अहिले हामीहरु सुख सुविधाहरुप्रति अभ्यस्त बनिसकेका छौं । तर विगतमा सधैं यस्तो थिएन र भविष्यमा पनि हुनेछैन । प्राइसका अनुसार अहिले २५ वर्षसम्म म्याद हुने फ्रिजमा राखिएको सुख्खा मासुको माग तीव्र रुपमा बढेको छ । उनले आफ्नो जीवन रक्षा तालिममा पनि यसको लाभ उठाएका छन् ।

उनका अनुसार पछिल्लो केही वर्षयता बेलायतमा सर्भाइबल ट्रेनिङका पाठ्यक्रममा नाम दर्ता गराउने मानिसहरुको संख्यामा करीब ७५ प्रतिशतले वृद्धि भएको छ । उनी भन्छन्- हामी जब पहिलोपटक यस्तो कक्षा सुरु गरेका थियौं, त्यतिबेला सानो समूहमात्रै थियो र अधिकांश मानिसहरुले घर बाहिर कसरी बाँच्ने भन्ने विषयमा जान्ने रुचि राख्दथे । अहिले हरेक बेलायतीसँग एउटा 'बग आउट ब्याग' हुनुपर्छ । जसमा जंगलमा ७२ घण्टासम्म जीवित रहनका लागि आवश्यक पर्ने सम्पूर्ण चिज होउन् ।

**उत्तरी युरोपभर युद्धबाट जोगिने तयारी**

रुससँगको बढ्दो तनावलाई लिएर युरोपमा धेरै मानिसहरुले भय तथा चिन्ता व्यक्त गरिरहेका छन् । फेसबुक ग्रुप युके प्रेपर्स एण्ड सर्भाइबलिस्ट्सका करीब २२ हजार ५ सय सदस्य छन् । उत्तरी युरोपेली देशहरुले आपतकालीन योजना बनाउनमा अग्रणी भूमिका निर्वाह गरेका छन् ।

स्विडेनका अधिकारीहरुले घरमा बोतलबन्द पानी, अलिक तागत दिने खानेकुरा, कम्बल, वैकल्पिक हिटिङ तथा ब्याट्रीबाट चल्ने रेडियो आफूसँग राख्न आम मानिसहरुलाई सल्लाह दिएका छन् । त्यसैगरी नर्वेमा मानिसहरुलाई परमाणु आक्रमणको अवस्थामा आयोडिनका चक्की सहित औषधीहरु जम्मा गर्न भनिएको छ ।

त्यस्तै जर्मनीमा भूमिगत तला, ग्यारेज तथा स्टोर रुमलाई बंकरको रुपमा प्रयोग गर्न परिवारहरुलाई सुझाव दिइएको छ । उता पोल्याण्डमा नयाँ घर बनाउँदा अनिवार्य रुपमा सुरक्षित आश्रयस्थल बनाउनुपर्ने नियम राखिएको छ ।

-एजेन्सीको सहयोगमा

## नेपालको..

पनि उनको नेतृत्वमा यो सम्बन्ध सुधार्न ठोस पहल भएको छैन । बैंकक भेटमा यस्ता मुद्दा उठे पनि होला, मन्तव्यमा यसको झल्को छ तर प्रधानमन्त्री ओलीको मन्तव्यले समाधानको कुनै संकेत दिँदैन । यो सांकेतिक भनाइले राष्ट्रवादी समर्थन जुटाउन सक्ला, तर दीर्घकालीन सम्बन्धमा नकारात्मक प्रभाव पारिरहेको छ र नेपालको कूटनीतिक विश्वसनीयता माथि प्रश्न उठाउँछ ।

डोनाल्ड ट्रम्पको दोस्रो कार्यकालसँगै अमेरिकी सहयोग (यूएसएड) रोकिनु र प्रधानमन्त्री ओलीले त्यसमा भारतको हात रहेको संकेत गर्नुले नेपालको भूराजनीतिक दबाब उजागर गर्छ । 'अर्काको खेतको कुलो नभत्काऔं' भन्ने भनाइले भारतले अमेरिकी सहयोग रोकेर प्रभाव कायम राख्न खोजेको आरोप संकेत गर्छ । ट्रम्पले दक्षिण एसियामा भारतको सुझावलाई प्राथमिकता दिने नीतिमा यो शंका आधारहीन नहोला । तर ठोस प्रमाणबिना अभिव्यक्ति दिनु तनावको अर्को संकेत हो ।

यो परिस्थितिले नेपालको आर्थिक स्वतन्त्रता र कूटनीतिक स्वायत्ततामाथि प्रश्न उठाउँछ । यदि भारतले अमेरिकी सहयोग रोक्न प्रभाव पारेको हो भने, यो बाह्य हस्तक्षेपको चिन्ताजनक उदाहरण हो । तर प्रधानमन्त्री ओलीले यो चुनौती समाधान गर्न कुनै ठोस योजना अघि सारेका छैनन् । यो मुद्दाले राष्ट्रवादी भावना जागृत गर्नसक्ला, तर बाह्य प्रभावबाट जोगिन आर्थिक नीति र कूटनीति बलियो बनाउने पहलको अभावले उनको कमजोरी देखिन्छ । यसले नेपाललाई ठूला शक्तिहरूको खेलमा विचौलिया बनाउँछ र विकासमा बाह्य निर्भरता बढाउँछ । प्रधानमन्त्री ओलीले बीआरआईको प्रत्यक्ष उल्लेख नगरे पनि, 'छिमेकको नीतिलाई प्राथमिकतामा अर्को छिमेकीले सघाउनुपर्ने' कथनले चीनसँगको आर्थिक सहकार्य संकेत गर्छ । बाह्य मुलुकहरूले 'नेपाल चीनतर्फ ढल्केको' ठाने पनि, प्रधानमन्त्री ओलीले यो आरोप खण्डन गर्न खोजेका छन् । बीआरआईलाई आर्थिक अवसरको रूपमा हेरिए पनि, सुस्त प्रगति, पारदर्शिताको अभाव र ऋणबारे सूचना नआउँदा यो विवादमा छ ।

चीनसँगको निकटताले भारतमाथिको निर्भरता घटाउने अवसर दिएको छ । तर यो सम्बन्धले भारत र पश्चिमा मुलुकहरूको चिन्ता बढाएको छ । प्रधानमन्त्री ओलीको मन्तव्यमा चीनप्रति प्रत्यक्ष प्रशंसा वा आलोचना नहुनुले सन्तुलनकारी नीति झल्किन्छ । तर यो व्यवहारमा कठिन छ । बीआरआईको सन्दर्भमा रणनीतिक स्पष्टता नहुनुले उनको विदेश नीति परिस्थितिजन्य प्रतिक्रियामा आधारित छ । जसले दीर्घकालीन रणनीतिक लाभ सुनिश्चित गर्न सक्दैन ।

प्रधानमन्त्री ओलीले राष्ट्रिय हितलाई 'भूगोल, विकास, र सहयोग' को बहुआयामिक अवधारणाको रूपमा प्रस्तुत गरेका छन् । 'भूराजनीतिलाई कमजोरी ढाक्ने आवरण नबनाऔं' र ' न्यायोचित सम्बन्ध' को आह्वानले स्वायत्तताको पक्षमा बोलेको देखिन्छ । तर यो सैद्धान्तिक रूपमा बलियो भएपनि व्यवहारमा ठोस योजना छैन । लिपुलेक-कालापानी सुल्झेको छैन, बीआरआईमा प्रगति सुस्त छ र अमेरिकी सहयोग कटौतीले चुनौती थपिएको छ ।

प्रधानमन्त्री ओलीको मन्तव्य र बैंकक भेटपछिको परिस्थितिले नेपालको विदेश नीति सन्तुलनको कठिन डोरीमा हिँडिरहेको देखाउँछ । भारतसँगको तनाव, चीनसँगको आर्थिक अवसर र अमेरिकी सहयोग कटौतीले भूराजनीतिक दबाबमा राखेको छ । उनको सांकेतिक र लाक्षणिक अभिव्यक्तिमा सैद्धान्तिक स्पष्टता देखिए पनि व्यवहारिक रणनीति हराइरहेको छ । असंलग्न नीति र शान्तिको पक्षधरताको आधार बलियो बनाउन खोजे पनि, भारत-चीन तनाव र अमेरिकी प्रभावले चुनौती थप्छ । 'अहिले कसैले थाहा नपाउन्, सोधिहाले मैले त भनेको छु' शैलीले उनको कुटनीतिक सीमालाई उजागर गर्छ । यो परिस्थितिले नेपाललाई कूटनीतिक सुधारको अवसर पनि दिन्छ, तर प्रधानमन्त्री ओलीको नेतृत्वले यो अवसर उपयोग गर्न सकेको देखिँदैन ।

'बलियाले जे गरे पनि जायज हुने स्थिति नहोस्' भन्ने भनाइ सही भएपनि ठूला शक्तिहरूसँग बलियो अडान र रणनीति नहुनु उनको कमजोरीको संकेत हो । कार्यान्वयनको खाका नहुनुले राष्ट्रिय हितको कुरालाई खोक्रो नाराझैं बनाएको छ । जसले नेपालको कूटनीतिक प्रभावकारितालाई कमजोर बनाउँछ । - न्युज एजेन्सी

## बालबालिका...

कानुनबारे थाहा नहुँदा अपराधी करार हुन र सजाय पाउन बाध्य मानिसका उदाहरण प्रस्तुत गर्दै कानुनी ज्ञान बाढ्नु पनि अपराध न्यूनीकरणको उपाय हुनसक्नेमा जोड दिए ।

संविधान सभा सदस्य उमा कपालीको अध्यक्षतामा मंगलबार शुरु कानुनी सचेतिकरण कार्यक्रम दुई दिनसम्म सन्चालन हुने महिला बिकास केन्द्रकी सचिव राजेश्वरी शिल्पकारले बताएकी छन् । संविधान सभा सदस्य सत्यलाल मूलले सहजीकरण गर्ने सचेतिकरण कार्यक्रममा वरिष्ठ अधिवक्ता हरिराम लवजू, मध्यपुर थिमी नगरपालिकाकी सामाजिक बिकास शाखा प्रमुख रेजिया चौधरी, बागमती प्रदेश सभाकी सदस्य भुवनकेशरी श्रेष्ठ भावना र सामाजिक ब्यक्तित्व कृष्णलाल गोजा लगायतले कानुनी अधिकारबारे अवगत गराउँदै महिला र युवालाई आवश्यक कानुनबारे प्रशिक्षित गराइने बताइएको छ । कार्यक्रममा करिब ४ दर्जन युवा, विद्यार्थी र महिला सहभागी छन् ।

## दलका..

धरानका विजयी मेयर हर्क साम्पाङले पनि राष्ट्रिय झण्डाकै प्रयोग गरेका थिए । यसरी एकातर्फ राष्ट्रिय झण्डाको क्रेज बढ्दै गएको देखिन्छ । यसमा दलकै शिर्ष नेताहरु अझ नेकपा एमालेका अध्यक्ष तथा वर्तमान प्रधानमन्त्री केपी ओलीको निर्देशनमा नेकपा एमालेका युवा संघको अगुवाईमा केही समय अगाडि देशका विभिन्न स्थानमा ठूला ठूला राष्ट्रिय झण्डा फहराउने अभियान नै चलाएको थियो । जसको कारण पनि नेपालमा युवाहरु माझ राष्ट्रिय झण्डाको क्रेज बढेको थियो ।

यसरी राष्ट्रिय झण्डाको प्रयोग हुनु राष्ट्रिय सम्मानको विषय हो । तर पछिल्लो समय राष्ट्रिय झण्डाको दुरुपयोग पनि हुने गरेको छ । गत चैत्र १५ गते भएको राजावादीहरुको आन्दोलनमा राष्ट्रिय झण्डाको प्रयोग गर्दै लुटपाट, आगजनी र हुलदंगाका घटनासमेत हुन पुग्यो ।

यसले बर्तमानमा दलगत झन्डाभन्दा राष्ट्रिय झण्डाले आकर्षणबाट आम जनतामा राजनीतिक दल प्रतिको वितृष्णा नै मुल कारण रहेको देखिन्छ । अझ राष्ट्रिय स्वतन्त्र पार्टीले पनि आफ्नो दलगत कार्यक्रमहरूमा राष्ट्रिय झण्डाको प्रयोग बढी गर्न थालेको छ ।

मेडिकल व्यापारीको रुपमा चिनिएका दुर्गा प्रसाईंले आफ्नो कार्यक्रमहरूमा समेत राष्ट्रिय झण्डाको प्रयोग व्यापक रुपमा गर्न थालेका थिए । तीनकुनेमा चैत १५ गते आयोजित विरोध कार्यक्रममा सहभागीहरू राष्ट्रिय झण्डासहित उपस्थित भएका थिए । सोही समूहबाट तीनकुनेमा अप्रिय घटनासमेत हुनुले राष्ट्रिय झण्डाको अपमान भएको विज्ञको ठहर छ ।

त्यस्तै हिजो मंगलबार बल्खुमा राप्रपाले आयोजना गरेको सभामा समेत उही तीनकुनेकै शैलीमा राप्रपाको भन्दा राष्ट्रिय झण्डाकै बाहुल्यता रहेको देखियो । दलकै कार्यकर्ताहरुमा दल प्रति आस्था नभएको देखिनु राष्ट्रिय प्रजातन्त्र पार्टीका नेताहरुको लागि नैतिकताको विषय बनेको छ । राप्रपा बर्तमान नेपालको संविधान २०७२ लाई स्वीकार गर्दै संसदीय निर्वाचन मार्फत संसदमा प्रतिनिधित्व गरेको पार्टी हो । तर त्यही पार्टी बर्तमान व्यवस्था परिवर्तनको नारा दिएर सडक संघर्षमा आउनु अघि पार्टीले संसदबाट राजीनामा दिएर यो व्यवस्था नमान्ने प्रतिबद्धताका साथ आउनु पर्ने हो । तर राप्रपाका नेताहरुमा वर्तमान संसदको सेवा, सुविधाहरु त्याग्ने कुनै मनसाय देखिदैन । मात्र आम जनसमुदायमा बर्तमान दलीय राजनीति प्रति देखिएको वितृष्णालाई भजाएर लोकप्रिय बन्नुमा केन्द्रित रहेको देखिन्छ । जसको ज्वलन्त उदाहरण भनेको नै राप्रपाका कार्यकर्ताहरुमा दल प्रति कुनै प्रकारको आस्था नरहेको कार्यक्रममा सहभागीहरुले राष्ट्रिय झण्डा बढी मात्रामा बोकेकोबाटै प्रष्ट हुन्छ ।

त्यस्तै अर्को रमाइलो विषय राप्रपाको कार्यक्रमस्थलमा राष्ट्रिय झण्डाको व्यापार व्यवसाय फस्टाएको पनि देखियो । जसको कारण पनि कार्यक्रममा दलको झण्डाको तुलनामा राष्ट्रिय झण्डाको प्रयोग बढी देखिएको हुन सक्दछ ।

## विस्थापित...

निकै दयनिय रहेको बताए । उनले कुसुमखोलामा खेतीपाती गरेर राम्रो जिविका चलाईरहेको चेपाङहरुलाई प्रलोभनमा पारेर बाध्य बनाई बसोबास स्थान छोड्न लगाएको आरोप लगाए । राज्यले दिएको आश्वासनले चेपाङहरुको मानवअधिकारको हन्न भईरहको उनले बताए । कुसुमखोलाबाट विस्थापित चेपाङहरु परवीखोलामा बसोबास गरिरहेको भएपनि सुरक्षित आवासको व्यवस्था नहुँदा, खेतीपाती गर्ने जग्गा, खानेपानी शौचालयलगायतको व्यवस्था राम्रो नहुँदा चेपाङहरुको दैनिकी नाजुक हुँदै गएको जानकारी दिए । उनले 'परवीखोलामा बसोबास चेपाङलाई पहिलेकै स्थान कुसुमखोलामा फर्काईनुपर्छ, उनीहरुले खेतीपाती गरि खाएको देखेर बसीसकेको बस्तीलाई जबरजस्ती निकालेर अहिले अर्कै मान्छेहरुले कमाई गरि खाईरहेको छ । हाम्रो एकलौटी माग भनेको परवीखोलामा बसेको चेपाङलाई कुसुमखोलामा सार्नुपर्छ ।' भने ।

राष्ट्रिय आदिवासी जनजाति महिला महासंघकी महासचिव शोभा सुनुवारले कुसुमखोलाबाट विस्थापित भई परवीखोलामा बसिरहेका चेपाङको अवस्थालाई सुधार गर्न महिला महासंघले स्थानिय तह माडी नगरपालिका, वडा र भरतपुर उपमहानगरपालिकामा समेत ध्यानर्कषण गराईसकेको जानकारी दिए । उनले महिला महासंघले बागमती प्रदेशसभा सदस्यहरुलाई पनि परवीखोलामा बसोबास चेपाङको जिविका उकास्न पहल गरिरहेको जानकारी दिइन् । स्थानियतहमा गरेको पहलले परवीखोलामा बसोबास गरिरहेका चेपाङहरुले आफ्नो जिविकामा थोरै सुधार गरेको समेत बताए ।

अन्तरक्रिया कार्यक्रमलाई संबोधन गर्दै आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठानका उपाध्यक्ष रेशम गुरुङले अध्ययन अनुसन्धान र चेपाङहरुको परम्परागत ज्ञान दस्तावेजिकरणमा प्रतिष्ठानले सहयोग गर्ने बताए । उनले प्रतिष्ठानको आयस्रोत अनुसार प्रत्येक जनजाति संघसंस्थाहरुसंग सहकार्य गरि कार्यहरु गरिरहेको जानकारी दिदै उनले चेपाङ समुदायको उत्थानको लागि प्रतिष्ठानले सकेको सहयोग र सहकार्य गरि कार्यक्रमको आयोजना गर्ने प्रतिबद्धता व्यक्त गरे ।

नेपाल चेपाङ महिला संघकी अध्यक्ष शर्मिला चेपाङको अध्यक्षतामा भएको कार्यक्रममा नाफानका भोला भट्टराई, आईपासका डा. श्री महर्जन र दिव्य गुरुङ, लगायतले कुसुमखोलाबाट विस्थापित भई परवीखोलामा बसेका चेपाङको अधिकार प्राप्तीका लागि सबै एकजुट भएर राज्यलाई झक्झकाउनुपर्ने बेला आएको बताए । उनीहरुले स्थानिय तहमा निर्वाचित चेपाङ जनप्रतिनिधिहरुलाई भेला गराई आदिवासीहरुको अन्तराष्ट्रिय कानुनहरु युएनड्रिप, आईएलओ महासन्धी १६९ का विषयमा अभिमुखिकरण गराउनुपर्ने धारणा राखे ।

# फुटबल मैदान मुनि भेटियो इतिहासको खजाना !

काठमाडौं । अस्ट्रियाको राजधानी भियना नजिकैको फुटबल मैदानको मर्मत सम्भारको क्रममा एउटा विशेष र डरलाग्दो बस्तु भेटिएको खुलासा भएको छ । वास्तवमा, यहाँ ईस्वीको प्रथम शताब्दी र रोमन साम्राज्यको सामूहिक चिहान भेटिएको छ । यस चिहानमा सम्भवतः १५० भन्दा बढी सैनिकहरूको कंकाल भेटिएको थियो ।

पुरातत्वविद्हरूका अनुसार यो खोज जति अँध्यारो छ त्यति नै अनौठो छ र यसले रोमन साम्राज्यको उचाइमा जीवनको बारेमा नयाँ अन्तर्दृष्टि प्रदान गर्न सक्छ । भियना शहर सयौं वर्षदेखि अस्तित्वमा छ, तर यसको इतिहास अझ पुरानो छ । लगभग २,००० वर्ष पहिले, रोमन सेनाहरू हालको अस्ट्रियासम्म फैलिएका थिए र यस क्षेत्रमा असंख्य सैन्य चौकीहरू स्थापना गरेका थिए । डेन्यूब नदीमा अवस्थित भिन्डोबोना नामक बस्ती सबैभन्दा ठूला ग्यारिसनहरू मध्ये एक थियो, र यो अन्ततः १६,००० देखि २०,००० बासिन्दाहरूको घर रहेको थियो । रोमले अन्ततः ४३३ ईस्वीमा भिन्डोबोना हुनहरूलाई सुम्पिदियो, र चौकी शताब्दीयौंसम्म उजाड रह्यो । यद्यपि, विज्ञहरूसँग यस क्षेत्रमा युद्धको ऐतिहासिक विवरण मात्र छ र कुनै प्रत्यक्ष प्रमाण छैन ।

अक्टोबर २०२४ मा, भियना नजिकैको शहर सिमरिङमा फुटबल मैदानको मर्मतसम्भार गर्ने क्रममा निर्माण टोलीले कंकालको समुद्रनै फेला पारेको थियो । भियना संग्रहालयका पुरातत्वविद्हरू चाँडै नै उक्त स्थानमा पुगे र असाधारण खोजको पुष्टि गरेः कम्तिमा १२९ व्यक्तिहरूको सामूहिक चिहान, तर सम्भवतः धेरै फेला परेको जनाएको छ । थप विश्लेषणले पुष्टि गर्‍यो कि शरीरहरू लगभग पूर्ण रूपमा २० देखि ३० वर्ष उमेर समूहका रोमन सिपाहीहरूको थिए, जसमध्ये सबैमा भाला, तरवार, खंजर र तीरबाट घातक चोटपटक लागेको प्रमाण देखियो । तर सामान्य दृष्टिकोणबाट यो खोज जति अचम्मलाग्दो छ, पुरातत्वविद्हरूका लागि पनि यो अविश्वसनीय साबित भयो । इतिहासका अनुसार, रोम सैन्य अभियानको अभावको लागि परिचित थिएन । तर चौथो शताब्दी ईस्वी सम्ममा, रोमीहरूले शव गाड्नुको सट्टा जलाउन थाले । "रोमन साम्राज्यमा, गाड्ने कडा संस्कारहरू थिए, र मृत्युपछिको जीवनको लागि सटीक नियमहरू पालना गर्नुपर्थ्यो, "भियनाका पुरातत्व प्रमुख क्रिस्टिना एडलर-वुल्फले शहरको बारेमा भने । "१०० ईस्वीतिर रोमन साम्राज्यको युरोपेली भागहरूमा दाहसंस्कार सामान्य भएकोले, गाड्नु अपवाद थियो । त्यसैले यस अवधिका रोमन कंकालहरू फेला पर्नु अत्यन्तै दुर्लभ छ ।"

वर्ष १८ अङ्क ३२ २०८१ चैत्र २७ गते बुधबार
09 April 2025, Wednesday
इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# "तिमी मेरो जीवन साथी" म्युजिक भिडियोको प्रिमियर सम्पन्न




भक्तपुर । "तिमी मेरो जीवन साथी" म्युजिक भिडियोको प्रिमियर संसार अनलाइनको युट्युब च्यानल मार्फत एक कार्यक्रम बीच चैत्र २२ गते शनिबार प्रिमियर गरिएको छ । प्रिमियर बरिष्ठ निर्देशक तथा कार्यक्रमका प्रमुख अथिति पवन जोशीले रिमोट अन गर्दै युट्युव मार्फत प्रिमियर गरको कार्यक्रममा बोल्दै नव निर्देशक सुरेन्द्र श्रेष्ठले कला क्षेत्रमा खलनायकको भूमिकाबाट नायक, चरित्र अभिनेता हुँदै निर्देशकको रुपमा आफूलाई परिचय दिन सफल बनेकोमा सफलताको शुभकामना व्यक्त गर्दै निदेशन कार्य अब्बल रहेको विचार व्यक्त गरे । त्यस्तै कार्यक्रममा म्युजिक भिडियो गीतका रचनाकार प्रकाश दीप श्रेष्ठ रहेका छन् भने स्वर यमन श्रेष्ठ र अन्जेला श्रेष्ठले दिएका छन् । त्यस्तै गोविन्द ह्युमतको संगीत रहेको गीतका एरेन्जर जीवित जल्मी हुन ।

अन्नपूर्ण स्टुडियोमा रेकर्ड भएको गीतको रेकर्डिष्ट विजय मास्के हुन । त्यस्तै म्युजिक भिडियोमा अभिनय गर्ने कलाकार हरुमा निमाृता गोपाल कृष्ण सिल्पकार र सरु भारती रहेका छन् भने म्युजिक भिडियोको निर्देशन सुरेन्द्र श्रेष्ठले गरेको थियो ।

कार्यक्रममा सिने पत्रकार विजयरत्न तुलाधरका साथ नेपाल पत्रकार महासंध भक्तपुर शाखाका अध्यक्ष सुन्दर सिल्पकारका साथ अन्य कलाकार तथा सिनेकर्मीहरुको बाक्लो उपस्थिति रहेको थियो ।

# उडानले जित्यो नेपाली सेना लघुचलचित्र प्रतियोगिता




काठमाडौं । नेपाली सेनाले हरेक वर्ष गर्दै आएको लघुचलचित्र प्रतियोगितामा यो वर्ष रबिन तामाङको लघुचलचित्र 'उडान'ले प्रथम स्थान हासिल गरेको छ । नेपाली सेना लघुचलचित्र प्रतियोगिता २०८१ अन्तर्गत प्राप्त ५० ओटा आलेखमध्ये छनोट भएको उत्कृष्ट १० प्रतियोगी कथाले लघुचलचित्र निर्माणमा भाग लिएको थियो । गत चैत २० गते कार्यक्रमका प्रमुख अथिति तथा प्रधान सेनापती अशोकराज सिक्देलको उपस्थितिमा आर्मी हेडक्वाटर भद्रकालीको सभाहलमा सम्पन्न भएको लघुचलचित्र प्रतियोगितामा प्रथम स्थान हासिल गरेको 'उडान'ले २ लाख नगद पुरस्कारसमेत प्राप्त गरेको थियो । बिगतमा नेपाली सेना लघुचलचित्र प्रतियोगिता २०७८ मा पनि तामाङको लघुचलचित्र 'कस्तुरी' प्रथम र 'डोल्मा' ले तेस्रो स्थान हासिल गरेको थियो ।

लघुचलचित्र 'उडान' मा आर्मी जङगल र जंगली पैदावारको सुरक्षा गर्नको निमित वन्यजन्तुको संरक्षणको निमित्त निकुञ्जमा तैनाथ रहन्छ । तर निकुञ्ज नजिकैको बस्तिको एक बालिका निकुञ्जकै जनावरबाट बाली बचाउनको लागि कर्नपर्ने हन्छ । यहि समस्या र समाधानको वरिपरि कथावस्तु रहेको छ । चलचित्रमा मुख्य भुमिका निर्वाह गर्ने बाल कलाकार सुपृम राईको अभिनयले निकै तारिफ बटुलेको थियो । ग्याल्जेन कृयसनको प्रस्तुतिमा बनेको लघुचलचित्र 'उडान' मा मिस तामाङ रिया लामा, रमिला मोक्तान, सुनिता श्रेष्ठ, टोनि तामाङ, विकास थापा मगर, बिरबल घले, सुवास राई, सुक्रराज मगरको अभिनय रहेको छ ।

'उडान'को कास्टिङ डाइरेक्टर सुरेन्द्र क्षेत्री हुन् भने छायांकन बिनोद बलले गरेका छन् । कृयटिभ डिरेक्सन बाबुराम निरौलाले गरेका छन् । मुख्य सहायक निर्देशक अन्सुल डागी, पन्कज सार्की रहेका छन् । भरत महरले सेट डिजाइन गरेका हुन् । पोस्ट प्रोडक्सन रिमा फिल्मस्ले गरेको 'उडान'को सम्पादन मिराज अर्यालले गरेका हुन् । लघुचलचित्रको साउन्ड डिजाइन तथा पार्श्व गाएन मनोज खड्काले गरेका हुन् ।

# आईएनसीको आयोजनामा क्यान्सर सचेतना र सम्मान समारोह सम्पन्न

काठमाडौं । इन्टरनेशनल नेप्लिज कम्युनिटी काठमाडौंको आयोजनामा क्यान्सर रोगसम्बन्धी सचेतना कार्यक्रम, वरिष्ठ गायिका देविका बन्दनाको क्यान्सर रोगमाथि विजय प्राप्त गरिसकेपछिको अनुभव तथा सम्मान समारोह अर्याल इन्टरनेशनल होटल, बानेश्वरमा सम्पन्न भएको छ ।

संस्थाका नेपाल प्रतिनिधि तिर्थराज आचार्यले सञ्चालन गरेको उक्त कार्यक्रममा पाटन अस्पतालका क्यान्सर विशेषज्ञ डा. अरुण शाहीले क्यान्सर रोगसम्बन्धी सचेतनामूलक प्रस्तुति दिएको थियो । त्यस्तै, कार्यक्रममा गायिका देविका बन्दना, गायिका कुन्ती मोक्तान, गायक यश कुमार, नेपाल क्यान्सर अस्पतालका डा. उत्सवमान श्रेष्ठ, आयुर्वेद चिकित्सक डा. प्रकाश ज्ञवालीलगायतले आफ्नो मन्तव्य राखेको थियो । कार्यक्रमको संयोजन हाल अस्ट्रेलियामा बस्दै आएका संगीतकार टिका दाहालले गरेको थियो ।

उक्त कार्यक्रममा गायिका बन्दनासँगै बौद्ध धर्मगुरु टुल्कु कर्मा साङ्पो रोका (सम्सारा गुरू) पनि सम्मानित भएको थियो । इन्टरनेशनल नेप्लिज कम्युनिटीले गायिका बन्दनाको हौसला अभिवृद्धिका लागि बन्दना द्वारा लिखित जित्नेको हाँसो पुस्तकका ५० प्रति खरिद गरेको थियो ।

विश्वभर विभिन्न पेशा, व्यवसाय तथा श्रम क्षेत्रमा आवद्ध भई सामाजिक सञ्जालमा सक्रिय नेपालीभाषी युवाहरूको समूहले स्थापना गरेको इन्टरनेशनल नेप्लिज कम्युनिटी पवित्र उद्देश्यका साथ व्यक्तिगत, सामाजिक र राष्ट्रिय उन्नयनका लागि समर्पित भएर कार्य गर्दै आएको छ ।

संस्थाले हालसम्म सामाजिक सञ्जालमार्फत स्वास्थ्य, साहित्य, कानुनी परामर्श र महिला सशक्तीकरण सम्बन्धी कार्यक्रम सञ्चालन गर्दै आएको छ । त्यस्तै, भौतिक रूपमा दैवी प्रकोप पीडित सहयोग, खेलकुद प्रशिक्षण, शिक्षा तथा क्यान्सर सचेतनामूलक कार्यक्रम पनि सञ्चालन भइरहेको छ । कार्यक्रममा संस्थाका सदस्यहरू र संगीतकर्मीहरूको उल्लेखनीय उपस्थिति रहेको थियो ।

# अभिभावकहरूका लागि "डिजिटल सेफ्टी"को चिन्ता

काठमाडौं । विश्वमा इन्टरनेट र सूचना प्रविधिको विकास र बढ्दो प्रयोगसँगै अभिभावकहरूका लागि 'डिजिटल सेफ्टी' एक ठुलो चुनौती बनेको छ । खास गरी बालबालिकाहरु अनलाइनमा अश्लील सामग्री, साइबर क्राइम र अन्य खतरापूर्ण गतिविधिहरूमा फस्न सक्ने संम्भावना बढ्दै छ । यही कारण अभिभावकहरू आफ्ना बच्चाहरूलाई डिजिटल डिभाइस दिन डराउँछन् ।

नेपालमा सरकारले अश्लील सामग्रीलाई प्रतिबन्धित गरेपनि डिजिटल दुनियाँमा यस्ता सामग्रीलाई पूर्ण रूपमा रोक लगाउनु असम्भव जस्तो बनेको छ । त्यसैले, अभिभावकहरूको जिम्मेवारी बढेको छ । तर केही साधारण उपाय अपनाएर बालबालिकाको अनलाइन सुरक्षा बढाउन सकिन्छ । आज हामी तपाईंलाई ६ प्रभावकारी उपायहरू बारेमा बताउँदै छौं :

प्यारेन्टल कन्ट्रोलः पहिलो र साधारण सुरक्षा उपाय

अभिभावकले आफ्नो बच्चालाई मोबाइल, ल्यापटप वा अन्य डिजिटल डिभाइस दिँदा प्यारेन्टल कन्ट्रोल एक्टिभेट गर्नुपर्छ । यसले बच्चालाई अश्लील र अनुचित सामग्रीको पहुँचबाट बचाउँछ ।

विन्डोज, म्याकजस्ता अपरेटिङ सिस्टमहरूमा प्यारेन्टल कन्ट्रोलको अप्सन रहेको छ । यसबाट अभिभावकले वेबसाइटहरू ब्लक गर्न, स्क्रिन टाइमको सीमा राख्न र सामग्री फिल्टर गर्न सक्छन् । मोबाइलमा पनि यस्ता सेटिङहरू उपलब्ध छन्, जसमार्फत अनलाइनमा बालबालिकालाई केके हेर्न दिने भनेर नियन्त्रण गर्न सकिन्छ ।

ब्राउजर एक्सटेन्सनः अनलाइन सामग्री फिल्टर गर्ने

इन्टरनेट ब्राउजरमा पनि अभिभावकहरूले एक्सटेन्सन प्रयोग गरेर अनावश्यक वा अश्लील सामग्रीलाई फिल्टर गर्न सक्छन् । 'ब्लक साइट' जस्तो एक्सटेन्सनले वेबपेजहरूलाई ब्लक गर्ने काम गर्दछ । यसलाई आफूले चलाउने ब्राउजरमा इन्स्टल गर्नुपर्ने हुन्छ । यसपछि बालबालिकाले हेर्न सक्ने वेबसाइटहरू मात्र देखाउन सकिन्छ ।

गुगल सेफसर्चः सुरक्षित सर्च अनुभव

गुगल सर्चको 'सेफ सर्च' मोडलाई अन गरेर बालबालिकालाई अश्लील, हिंसात्मक र भ्रामक सामग्रीबाट जोगाउन सकिनेछ । गुगल सेटिङमा गएर यो मोड सजिलैसँग अन गर्न सकिन्छ ।

युट्युब रेस्ट्रिक्टेड मोडः सुरक्षित भिडिओ हेर्न

त्यस्तै युट्युबमा बालबालिकाबाट अश्लील भिडिओ सामग्रीबाट टाढा राख्न 'रेस्ट्रिक्टेड मोड' अन गर्नुपर्छ । यस मोडले युट्युबमा अपलोड भएका अश्लील भिडिओहरूलाई रोक्छ । वेब र मोबाइल एप दुवैमा यो मोड अन गर्न सकिन्छ ।

गुगल फ्यामिली लिङ्कः स्मार्ट निगरानी

गुगलले 'फ्यामिली लिङ्क' नामक एप ल्याएको छ । जसमार्फत बालबालिकाको अनलाइन गतिविधि ट्र्याक गर्न तथा नियन्त्रण गर्न सकिन्छ । यस एपको प्रयोगबाट बच्चाले कति समय मोबाइल प्रयोग गरिरहेका छन्, कुन एप डाउनलोड गर्दैछन् र कुन वेबसाइटहरू भिजिट गर्छन् कुरा थाहा पाउन सकिन्छ । साथै, अभिभावकले अनलाइन गतिविधि सुरक्षित बनाउन वेबसाइट र एप्लिकेसन ब्लक गर्न सक्छन् ।

एन्टीभाइरस सफ्टवेयरः अतिरिक्त सुरक्षा

अश्लील र अनुपयुक्त सामग्रीबाट बालबालिकालाई बचाउन विभिन्न एन्टीभाइरस सफ्टवेयरहरू प्रयोग गर्न सकिन्छ । नोर्टन, कास्पर्स्की, म्याकएफी, ट्रेन्ड माइक्रो जस्ता एन्टीभाइरस सफ्टवेयरहरूले इन्टरनेटमा हानिकारक सामग्री र भाइरसबाट पनि सुरक्षा पुऱ्याउँछ । यी सफ्टवेयरहरूमा बालबालिकामैत्री विकल्प हुन्छन्, जसमार्फत बालबालिकाले केवल सुरक्षित र स्वस्थ सामग्री मात्र हेर्न सक्छन् ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY

**एतिहासिक बिस्काः जात्रा तथा नववर्ष २०८२ को उपलक्ष्यमा सम्पूर्ण ग्राहक, पाठक, विज्ञापनदाता, लेखक, रचनाकार, शुभचिन्तक तथा देश विदेशमा रहनु हुने सम्पूर्ण नेपाली दाजुभाइ–दिदीबहिनीहरूमा सुख, शान्ति, समृद्धि, दीर्घायु एवं उत्तरोत्तर प्रगतिको हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।**

**थिमि टाइम्स साप्ताहिक परिवार**

वर्ष १८ अङ्क ३३ ने.सं. ११४५ चौलागा तृतीया बैशाख ०३ गते बुधबार, २०८२ 16 April 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

# फोनिजको आठौं महाधिवेशन नयाँ नेतृत्व चयन गर्दै बुद्धभूमि लुम्बिनीमा सम्पन्न



काठमाडौं-आदिवासी जनजाति पत्रकार महासंघ "फोनिज"को आठौं महाधिवेशन "समृद्धिको आधार ; पूर्ण समावेशी सञ्चार" भन्ने मूल नारका साथ ४७ सदस्यीय संघीय कार्यसमिति एवम् १७ बुँदे लुम्बिनी घोषणापत्र जारी गर्दै बुद्धभूमि लुम्बिनीस्थित लुम्बिनी विश्वविद्यालयको सभा भवनमा समापन भएको छ । पूर्व निर्धारित समय भन्दा झन्डै २ दिन बढी लगाएर फोनिज महाधिवेशन गत चैत २९, ३० र ३१ गते मध्यरात पछि निर्वाचन गर्दै समापन भएको हो । यस आठौं महाधिवेशनको उद्घाटन गर्दै महाधिवेशन समारोहका प्रमुख अतिथि सञ्चार तथा सूचना प्रविधि मन्त्री पृथ्वीसुब्बा गुरुङले गरिएको थियो । समुद्घाटन गर्दै प्रमुख अतिथि सञ्चार तथा सूचना प्रविधि मन्त्री एवम् सरकारका प्रवक्तासमेत रहेका गुरुङले वर्तमान संघीय लोकतान्त्रिक गणतन्त्रात्मक संविधानले आदिवासी जनजातिको पक्षपोषण गरेको बताउदै सञ्चार जगतमा समावेशीतासँगै गुणस्तरीय पत्रकारिता अपरिहार्य भएको उल्लेख गरे । त्यस्तै मन्त्री गुरुङले नेपाली सञ्चार जगत्मा विगतमा भइरहेको एकपक्षीय उपस्थिति वर्तमान न्यून हुँदै गइरहेको र पुराना सञ्चार नीति नियम परिवर्तन गर्दै लगिने जनाउँदै सामाजिक सञ्जाल टिकटक, फेसबुक इन्स्टाग्राम लगायत दर्ता गर्न सम्बद्ध पक्षलाई समय दिई आग्रह गरिएको बताउँदै समयसीमा भित्र दर्ता नभए बन्द गरिने चेतावनी दिए । सोही क्रममा मन्त्री गुरुङले फोनिज संघीय कार्यसमिति र काठमाडौं शाखाले प्रकाशित गरेको स्मारिका र भित्ते पात्रोसमेत विमोचन गरेका थिए । यसअघि विभिन्न समुदाय थारू, नेवार, मगर, गुरुङ लगायतका कलाकारले सांस्कृतिक कार्यक्रम प्रस्तुत गर्दै आमन्त्रित पाहुनाहरूलाई स्वागत गरेका थिए । यसैगरी महाधिवेशन सफलताको शुभकामना व्यक्त गर्न आमन्त्रित विशेष अतिथि लुम्बिनी प्रदेशका स्वास्थ्य मन्त्री खेम श्रीशमगर, विभिन्न राजनीतिक पार्टीका भातृ संगठनरुपका पत्रकारजन्य संगठनहरु प्रेस चौतारी नेपाल, प्रेस युनियन नेपाल, प्रेस सेन्टर नेपाल, समाजवादी प्रेस संगठन, प्रेस मञ्च, श्रमजीवी पत्रकार संघका अध्यक्ष जन्मदेव जैसी, फोनिजका सल्लाहकारहरू, फोनिज संघीय कार्यसमिति पदाधिकारी, प्रतिनिधि, अध्यक्ष, महासचिव सहित विभिन्न ८ जातीय भातृ संगठन पत्रकार

बाँकी पेज ७ मा

# मध्यपुर थिमि क्षेत्रमा बिस्का जात्रा र बोदेमा जिब्रो छेड्ने जात्रा सम्पन्न



भक्तपुर । मध्यपुर थिमि नगरपालिका-८, बोदेमा बैशाख २ गते जिब्रो छेड्ने जात्रा मनाइएको छ। यसवर्षको जात्रामा स्थानीय सुजन बागश्रेष्ठले तेस्रो पटक जिब्रो छेडाएर जात्रा शुभारम्भ गरेका हुन् । नाइकेहरूले विभिन्न देवगणको पूजा गरेपछि तेलमा डुबाइराखेको १० इन्च लामो सुइरोले पाँचो गणेशको प्राङ्गणमा रहेको पाटीस्थित मञ्चमा श्रेष्ठको जिब्रो छेडिएको हो । यसअघि, सुजनका बुवा बुद्धकृष्ण बागश्रेष्ठले नौ पटकसम्म जिब्रो छेडेर परम्परा धान्दै आएका थियो । त्यस पछि २०८० सालको बैशाख २ गते सुजनले पहिलो पटक जिब्रो छेडेर परम्पराको सुरुवात गरेका हुन् । चैत मसान्तको दिन बोदे महालक्ष्मी मन्दिर प्राङ्गणमा लिंगो उठाएपछि जिब्रो छेड्ने व्यक्तिले निराहार व्रत बसेर जिब्रो छेडाउने चलन छ । जिब्रो छेडाएपछि चन्द्राकारको भ्य अर्थात् महाद्वीप बोकेर टोलटोल घुम्ने र भाँगु टोलमा पुगेर पाँचो गणेश मन्दिरमा जिब्रो छेडेको सुइरो निकालेर महालक्ष्मी मन्दिरमा ठोकेपछि यो जात्रा सम्पन्न हुन्छ। दैवीय शक्तिलाई आधार मानेर प्राचिनकालदेखि नै मनाइँदै आएको बोदेको यो जात्रा नीलबाराही देवगणसँग सम्बन्धित रहेको छ ।

बाँकी पेज ७ मा

# बालकुमारी मन्दिर निर्माणार्थ महायज्ञ हुने



भक्तपुर । भक्तपुरको सूर्यविनायक नगरापालिका-२ बालकोटस्थित बसिक्व टोलमा श्री बालकमारी माताको परम्परागत शैलीको मन्दिर निर्माणार्थ महायज्ञ हुने भएको छ । बालकोटको एक प्राचिन बस्तीको रुपमा रहेको बसिक्व टोललाई मध्यपुर थिमिबाट बसाई सराई गरी आउनु भएका हिरामान चपल्गाँ श्रेष्ठको नामबाट हिरामान चोक वा हिरामान खलका नामले समेत चिनिने गरेको ठाउँमा महायज्ञ हुने भएको हो । आइतबार पत्रकार सम्मेलन गरी उक्त

बाँकी पेज ७ मा

# बिदा दिएकोमा मण्डनदेउपुर नगरपालिकाको आलोचना




भक्तपुर । नगरकोट भ्रमण वर्ष २०८२ लाई तीन दिन लगाएर उद्घाटन गरिएको छ । राष्ट्रपति रामचन्द्र पौडेलले सोमबार औपचारिक उद्घाटन गरेको कार्यक्रमको आज बुधबार समापन हुने भन्दै काभ्रेको मण्डनदेउपुर नगरपालिकाले सार्वजनिक बिदा दिएको छ । नगरपालिकाले स्थानीय बिदा दिन पाउने अधिकारको प्रयोग गर्दै प्रमुख स्तरीय निर्णयबाट नगरपालिकाभरि बिदा दिइएको प्रमुख प्रशासकीय अधिकृत सुरज श्रेष्ठले जनाएका छन् । उद्घाटन समारोहमा बिदा दिएको विषयमा आलोचना भइरहेको छ । मण्डनदेउपुर नगरपालिकाले भने जनप्रतिनिधि तथा कर्मचारीहरू

बाँकी पेज ७ मा

# बाहिरी जिल्लाका जनताका कारण बढेको उपत्यकाको भाउ, अहिले लाग्दैछ ओरालो !

रुषा थापा

देशभर ७७ वटा जिल्ला छन् । जसमध्ये ७४ वटा जिल्लाका मानिसहरु काठमाडौं, ललितपुर र भक्तपुर (उपत्यका) मा बसोबास गर्दछन् । बाहिरका मानिसहरु यहाँ आएपछि, जग्गाको मूल्य हवात्तै बढेको हो ।

२०३८-०३९ सालतिर नयाँ बानेश्वर, तीनकुने, कोटेश्वर, गौशालासहित राजधानीका अधिकांश स्थानमा रोपनीको एक हजारदेखि १२ सय रुपैयाँमा समेत जग्गा बिक्री नहुने यहाँका बुढापाका बताउँछन् । एक रोपनीमा १६ आना हुन्छ ।

अहिले यी स्थानमा जग्गा आनाकै करोड पुगेको छ । त्यतिबेला सुनसान रहने उपत्यकामा अहिले कुना कुनामा समेत चहलपहल देखिन्छ । जग्गाको मूल्य छोइनसक्नु भएको छ । यसो हुनुको एउटै कारण छ, ७४ वटा जिल्लाका मानिसहरुले उपत्यकामा जमिन किन्नु ।

जागिर खाएर, विदेश गएर वा व्यापार व्यवसाय गरेर कमाएको पैसाले उपत्यकामै जग्गा किने । आफ्नो गाउँ छोडेर मानिसहरु यहाँ बस्न थाले । जसका कारण यहाँका डाँडा काँडा वा भीर पाखासमेत बिक्न थाल्यो । केही वर्षयता देशभर मन्दी छाएको छ ।

कोरोना महामारीपछि आएको आर्थिक संकटका कारण मानिसहरुको अवस्था दिनप्रति दिन नाजुक बन्दै गएको छ । बेरोजगारी बढेको छ । काम गरेपनि तलब पाएको छैन । व्यापार व्यवसाय ठप्पै भएको छ । घरधनी भाडा बढाउँछन् तर आम्दानी छैन, अनि तिर्ने कसरी ? काठमाडौं जिल्ला मात्र होइन, देशको राजधानी पनि हो । राजधानी भएकाले देशभरका जनता यहाँ आउन हानाथाप गर्नु स्वभाविकै हो । किनकि गाउँका मानिसलाई राजधानी आउँदा अमेरिका, अस्ट्रेलिया पुगेभन्दा कम महसुस हुँदैन ।

तर, अहिले राजधानी वा उपत्यकामा बसोबास गर्नेहरु धमाधम गाउँ फर्किरहेका छन् । बसिरहेकाहरु पनि फर्किने सोचमा छन् । आखिर किन ? महँगी र बेरोजगारी । उपत्यकामा घरभाडा चर्को छ । सामानको मूल्य त्यत्तिकै महँगो छ ।

अनि बेरोजगार रहेको अवस्थामा कसरी चर्को घरभाडा र सामान किनेर खानु । त्यसैले, मानिसहरु गाउँको बाटो रोजेका हुन् । हिजो जसरी सेवासुविधाको खोजीमा ७४ वटा जिल्लाका जनता उपत्यका भित्रिएका थिए, त्यसरी नै अहिले फर्किरहेका छन् ।

तर, सेवासुविधाको खोजीमा

बाँकी पेज ६ मा

# तीनकुने घटनाबारे पूर्व राजाको धारणा

काठमाडौं । पूर्वाराजा ज्ञानेन्द्र शाहले तीनकुने घटनाबारे मुख खोलेका छन् । नयाँ वर्ष २०८२ को पूर्वसन्ध्यामा शुभकामना सन्देश जारी गर्दै शाहले चैत १५ गते भएको तीनकुने घटनाबारे आफ्नो धारणा सार्वजनिक गरेका हुन् । शाहले यस अवसरमा भिडिओ सन्देशसमेत जारी गरेका छन् ।

राजसंस्था पुनर्स्थापनाको माग राख्दै तीनकुनेमा भएको आन्दोलनमा दुई जनाको ज्यान गएको थियो । शाहले उक्त घटनामाबारे आफू अत्यन्तै दुःखी भएको बताएका छन् । 'केही दिनअघि जनप्रदर्शनमा जुन प्रकारको हिंसा, आगजनी, तोडफोड भयो, त्यसबाट जस प्रकारको मानवीय एवम् भौतिक क्षति भयो, त्यो सुन्दा हामीलाई अत्यन्तै दुःख लाग्यो,' शाहले विज्ञप्तिमा भनेका छन् ।

नयाँ वर्ष- २०८२ को अवसरमा पूर्वराजा ज्ञानेन्द्र शाहद्वारा व्यक्त शुभकामना सन्देशको पूर्ण पाठ :

हामी नेपालीहरुको घर आँगनमा नयाँ बर्ष दुई हजार बयासी आइपुगेको छ । नयाँ घाम, नयाँ ज्योति, नयाँ उत्साह लिएर आएको नव बर्षको उपलक्ष्यमा देश तथा विदेशमा रहे बसेका सम्पूर्ण नेपालीहरुको सुख र शान्तिको मंगलमय शुभकामना ।

हरेक नयाँ बर्ष नुतन आशा र विश्वास बोकेर आउने तर बर्षको विदाईमा एउटा घनघोर निराशाका बिच हुने गरेको धेरै साल भयो । समाजका विभिन्न दल, वर्ग र जनसमुदायले आफ्ना धारणा, आस्था तथा अभिव्यक्ति राख्न पाउनु प्रजातन्त्रको सुन्दर विशेषता हो ।

तर त्यस्तो धारणा र मान्यता प्रस्तुत गर्दा सबैले संयम अपनाउनु पर्दछ । केहि दिन अघि जनप्रर्दशनमा जुन प्रकारको हिंसा, आगजनी, तोडफोड भयो त्यसबाट जस प्रकारको मानवीय एवं भौतिक क्षती भयो त्यो सुन्दा हामीलाई अत्यन्तै दुःख लाग्यो ।

नागरिक स्वतन्त्रता भन्दा ठूलो तन्त्र वा वाद हुँदैन वास्तविक प्रजातन्त्र त्यहाँ हुन्छ जहाँ राम्रो, नराम्रो जनगुनासो वा गुणगान सुन्ने परम्परा र संस्कार हुन्छ ।

नेपाली जनतामा देश र भविश्यलाई लिएर जुन स्तरको जागरुकता पैदा भएको छ त्यसलाई हामीले सकारात्मक रुपमा लिएका छौं । वास्तवमा नेपाली जनतामा रहेको देशभक्तिपूर्ण भावना विश्व मै अनूकरणीय र अनुसरणीय छ ।

देशलाई विद्यमान जटिलताबाट मुक्त गराई शान्त, स्थिर र समृद्ध मुलुक बनाउने जागरुकता जुन पैदा भएको छ, नयाँ बर्ष दुई हजार बयासीमा नेपाली जनताको चाहना अनुरुपको परिणाम हासिल हुने विश्वास थपिएको छ ।

मुलुकमा व्याप्त अशान्ति, अराजकता, निराशा र असन्तुष्टिबाट आम नेपालीलाई मुक्त गर्न नेपालको राजसंस्थाले जहिले पनि योगदान पुर्‍याउँदै आएको विदितै छ । राष्ट्रियता र प्रजातन्त्रलाई मूल कार्य मान्दै जनभावना बमोजिम चल्ने वहुदलीय प्रजातन्त्र र सम्वैधानिक राजसंस्थाको परम्परामा हाम्रो मान्यता रही आएको छ । वर्तमानमा बदलिंदो जनचाहनाको पनि कदर गरि राज्यशक्तिको श्रोत जनता नै हुन भन्ने मन्जुरी सदैव स्थापित हुनु पर्दछ ।



राष्ट्रनिर्माता श्री ५ बडामहाराजाधिराजको दिव्य उपदेशलाई नै अबको राज्यसत्ताको मूल मन्त्र सोच्नुमा के होला रु सन्तुलित कूटनैतिक सम्बन्ध र आत्मनिर्भर नेपालको परिकल्पना नै पृथ्वीपथको मूलसार हो । यही नै राजनीतिको मूलधार हुनु पर्ने हो ।

विश्वको बदलिंदो परिस्थितिलाई मनन गर्दै विश्वव्यापीकरण र स्वतन्त्र व्यापारका आधारहरुलाई चुनौतीको रुपमा लिँदै चरम आर्थिक मन्दी भोग्न परिरहेको अहिलेको सन्दर्भमा नेपाल जस्ता विकासोन्मुख देशले आत्म निर्भर अर्थतन्त्र निर्माणको कार्यमा अर्जुनदृष्टि लगाउनु पर्ने समय आएको छ। स्वदेशी श्रोत साधनको प्रयोगले स्वदेश मै उतपादन गरि स्वदेश मै खपत गर्दै आन्तरिक अर्थतन्त्रको चक्र भित्रैबाट मुलुकको समग्र अर्थतन्त्र आत्मनिर्भर र चलायमान गराउनु पर्ने विश्व परिवेश निर्माण हुँदैछ भन्ने संकेतहरु देखा परिरहेका छन् ।

विश्व कै उत्कृष्ट यो भूमीमा, बाँच्न समेत गाह्रो हुने स्थिति पैदा भएपछि बढ्दो युवा पलायनलाई रोकी युवा शक्तिको श्रम र शीपलाई स्वदेश मै उच्च उपयोग गर्नु पर्दछ । युवा स्वरोजगारको निम्ति अवसरहरुको खोजी गरि नेपाल मै आय आर्जन गर्न सक्ने वातावरण तयार गर्नु पर्ने आजको पहिलो आवश्यकता बनेको छ। सबै नेपालीको तन, मन र ध्यान त्यसैमा लगाउनु परेको छ ।

विश्वभरि छरिरहेका नेपालीहरु एकताको सूत्रमा बाँधिन अब ढीला गर्नु हुँदैन। आफ्ना ज्ञान, शीप र सामर्थ्य मात्र होइन, त्यहाँ आर्जेको पुँजी, श्रोत र साधन समेत नेपालमै लगाउनु पर्दछ भन्ने भावना सबैमा जागृत गराउनु परेको छ । प्रकृतिले दिएको स्वर्ग जस्तै सुन्दर हिम्वत् खण्ड नेपाल श्रृंगार्न र विकासको विकुल फुक्न कसेर लाग्न र लगाउन ूस्वदेश फर्क स्वदेश नै स्वर्गू भन्ने अभियान चलाउनु पर्ने आजको आवश्यकता भएको छ ।

जनभावना र चाहना बुझी मुलुकको समग्र संरचनामा नै हेरफेर र सुधारका कदम चाल्नु पर्ने तथ्य स्पष्ट देखिन्छ । शिक्षा, स्वास्थ्य र दैनिक कामकाजका पद्धति र प्रणालीहरुमा आमूल परिवर्तन र सुधार गरि यीनको आधुनिकरण अनिवार्य भइसकेको छ। युग प्रविधीको हो, सावधानीपूर्वक उपयोग गर्न सकेमा राष्ट्रको योगदानमा ठूलो टेवा पुग्न सक्ने छ । "सूशासन र भ्रष्टाचारमुक्त प्रशासनू मूल नारा हुनु पर्दछ।

हामी अस्थिरता, अशान्ति, अराजकता, विपन्नता र भ्रष्टाचारको अन्त्य चाहन्छौं। त्यसका निम्ति नेपाली जनताबाट हुने हरेक प्रयासहरुमा हाम्रो एकबद्धता रहने छ। मुलुकको गिर्दो अर्थ व्यवस्था, रुग्ण हुँदै गएको औद्योगिक उत्पादन, बढ्दो राष्ट्र ऋण र वेरोजगारी, रक्षात्मक बन्दै गएको राष्ट्रियता, राष्ट्रिय एकता, सामाजिक सद्भाव, मौलिक धर्म, संस्कृति तथा जनस्तरमा बढेको निराशा, असन्तुष्टि हाम्रो चिन्ताको चिन्ताको मूल विषय हो।

नागरिक पलायनसँगै पूँजी पलायन, भ्रष्टाचार र बेथिति देशले थेग्नै नसक्ने स्तरमा झाँगिएको छ। यो स्थितिमा नयाँ बर्षलाई उपलब्धिमूलक बनाउन हामी सबै नेपालीको सामूहिक र एकताबद्ध प्रयास अपरिहार्य भएको छ ।

नेपाली नेपाली बिच द्वन्द नहोस् परस्पर अविश्वास र हिंसाको दुःखद मनोस्थिति नबनोस्, देशवासीहरु कुनै पनि नाम र निहुँमा धुर्विकृत नबनून् भन्ने तर्फ हामी सदैब सचेत र सम्बेदनशील छौं । नेपालीको एकतामा नै नेपालको भविश्य निहित रहेको यर्थाथलाई हामीले आत्मसाथ गरेका छौं, सबैले यही वास्तविकतालाई आत्मबोध गर्नु पर्दछ भन्ने ठान्दछौं।

हाम्रो आव्हान हामी कसैको निजी स्वार्थपुर्तिका निम्ति होइन, कुनै खालको सैद्धान्तिकवाद वा विचारको होइन समग्र राष्ट्रको स्वाधिनता, समग्र जनताको सम्प्रभुता तथा नेपाल र नेपालीको सुखमय प्रतिष्ठाको निम्ति हो। आफ्नै प्रकारको अग्रणी राष्ट्र हामीले नै बनाउने हो। अनि आफ्नो स्वतः र अस्तित्व हामी आफैले उठाउने हो ।

संसार धेरै अघि बढीसक्यो तर हामी यो वा त्यो वादको चक्रव्यूहमा फसेका छौं । नेपाल आमालाई केन्द्रमा राखेर हाम्रा विचार बन्नु पर्छ, हाम्रा कदम चल्नु पर्छ । हरेक समस्याको समाधान सम्वाद, सहमति, समन्वय र सहकार्यबाट हुनसक्छ ।

आगामी बर्ष नेपाली इतिहासको स्मरणीय र सुनौलो संझना बन्नु पर्छ र बनाउन सकिन्छ भन्ने विश्वास हामीले लिएका छौं। नयाँ बर्षले नयाँ आशा, उमंग र उत्साह ल्याओस्, अनि नेपालीको सुनौलो भविश्यको सुनिश्चिता होस् ।

श्री पशपतिनाथले हामी सबैको कल्याण गरुन्, जय नेपाल !

# पहिलोपटक ललितकला मेला, बैशाख ६ सम्म चल्ने



काठमाडौ । नेपाल ललितकला प्रज्ञा-प्रतिष्ठानको आयोजनामा 'ललितकला मेला- २०८२' सुरु भएको छ । नववर्ष र प्रतिष्ठानको १६ औं स्थापना दिवसको अवसर पारेर मंगलबारवाट मेला शुरु भएको हो ।

मेला उद्घाटन गर्दै प्रतिष्ठानका संरक्षकसमेत रहेका संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्री बद्रीप्रसाद पाण्डेले कलाले ज्ञान, अध्ययन तथा अनुसन्धानको गहिराइमा पुगी समाजको अन्तर्चेतना जगाउने र समाजलाई सही बाटामा लाग्न उत्प्रेरित गर्ने बताए । कला क्षेत्रका परम्परागत ज्ञान, सिपलाई पुस्तान्तरण गर्नुपर्नेमा जोड दिँदै उनले यो नै पछिका लागि इतिहास बन्ने धारणा राखेका थिए ।

प्रतिष्ठानका कुलपति नारदमणि हार्तम्छालीले प्रतिष्ठानले पहिलो पटक आयोजना गरेको मेलाले नेपाली कला क्षेत्रलाई थप चलायनमान बनाउने बिश्वास ब्यक्त गरे । नेपाल सङ्गीत तथा नाट्य प्रज्ञा-प्रतिष्ठानका कुलपति निशा शर्माले ठुलो कामको सुरुवात स-साना प्रयासबाटै हुने भन्दै कलाकार र कला अनुरागीलाई मेलाले उर्जा मिलेको बताइन् ।

प्रतिष्ठानका उपकुलपति तथा कार्यक्रम संयोजक लालकाजी लामाले नेपाली ललितकला क्षेत्रमा साधना, सिर्जना र अभ्यासमा रहेका कलाका विविध विधालाई समेटेर मेलाको आयोजना गरिएको जानकारी गराए ।

प्रतिष्ठानका सदस्य सचिव देवेन्द्रकुमार काफ्ले 'देवेन्द्र थुम्केली'ले मेलाका माध्यमबाट विविध विधाका कलाकार, समालोचक, अध्येता, बुद्धिजीवी, अनसन्धाता, कलाकृति तथा कला वस्तुहरूसँगै सर्जकहरूसमेतलाई एकै थलोमा भेला गराई स्थलगत रूपमा ललितकलाको प्रवर्धन तथा कलाकारको सम्मान र ललितकलामार्फत देशको सांस्कृतिक अर्थतन्त्रमा योगदान दिने मेलाको उदेश्य रहेको उल्लेख गरे ।

मेलाले नेपाली ललितकलाको विकासमा टेवा पुर्याउने दावी गर्दै सदस्य सचिव थुम्केलीले मेलामा ४५ भन्दा बढी स्टल रहेका समेत जानकारी गराए । मेला वैशाख ६ गतेसम्म चल्ने बताइएको छ ।

# मातृभाषा हराएकोमा देउवाको चिन्ता

काठमाडौं । नेपाली कांग्रेसका सभापति शेरबहादुर देउवाले सुदूरपश्चिमेली जनताले आफ्नो मातृभाषा बोल्न छाडेकोमा चिन्ता व्यक्त गरेका छन् । नयाँ वर्षको अवसरमा सुदूरपश्चिममा मनाइने 'बिसु पर्व' को शुभकामना आदानप्रदानका लागि सोमबार देउडा समाजले नेपाल प्रज्ञा प्रतिष्ठानमा आयोजना गरेको कार्यक्रममा उनले सुदूरपश्चिमेलीले आफ्नो भाषा बोल्न छाडेको भन्दै चिन्ता व्यक्त गरेका हुन् ।

'सुदूरपश्चिमको भाषा करिब-करिब हराउँदैछ, के गर्नुहुन्छ । कोही बोल्दैनन् आफ्नो पश्चिमको भाषा,' पूर्वप्रधानमन्त्री देउवाले भने, 'सब नेपाली बोल्छन् । हुँदाहुँदा छोरासँग अंग्रेजी बोल्छन् । भाषा हराइसकेको छ ।'

उनले भाषा हराए समाज कमजोर हुने र बिखण्डित हुने स्मरण गर्दै अन्य मुलुकमा भाषा बचाउने काम भइरहेको बताए । 'भाषा भनेको ठूलो कुरा हो । जुन देशको भाषा, जुन समाजको भाषा लुप्त हुन्छ, हराउँछ, त्यो समाज नै कमजोर हुन्छ । त्यो नै बिखण्डित हुन्छ भन्ने भनाइ छ,' देउवाले भने, 'संसारभरि नै आफ्नो भाषा बचाउनका लागि लडिरहेका छन् । बचाउन काम गरिरहेका छन् ।'

सभापति देउवाले सुदूरपश्चिमको भाषालाई जीवित राख्न सके आगामी दिनमा सुदूरपश्चिमेलीबाट नेपाललाई ठूलो योगदान हुन सक्ने पनि जिकिर गरे । 'हामीले पनि आफ्नो भाषालाई जीवित राख्न सकेको खण्डमा भोलिका दिनमा सुदूरपश्चिमका दाजुभाइ-दिदीबहिनीबाट नेपाललाई धेरै ठूलो योगदान हुन सक्ने छ,' उनले भने । नेपालमा विविध जनजातिहरको बसोवास रहेको छ । यहाँ विविध भाषा बोल्ने मानिसहरु छन् । तर नेपालको विगत र वर्तमानमा पनि सत्ता पक्षमा रहेका जोकोही नेपालमा एकल भाषा, एकल जातिय सोच र एकल संस्कृतिको पक्षपोषणमा लाग्ने गरेको तितो यर्थाथ सबैमा छ । यस्तो समयमा नेपाली कांग्रेसका सभापति तथा पूर्व प्रधानमन्त्रीसमेत बनि सकेका शेर बहादुर देउवाबाट आफ्नो थातथलोको मातृभाषा लोप हुन लागेकोमा चिन्ता जाहेर गर्नु राम्रै भएपनि आफू सत्तामा रहँदा राज्यकै एकल नीतिको पक्षपोषण गर्नुकै कारण भाषा हराएको हेक्का हुनु पर्ने हो । खैर ढिलै भएपनि चेत खुलेकोमा राम्रै मान्नु अन्यथा नहोला !

# नयाँ वर्षको पहिलो दिन मात्र फुल्ने फूल हेर्न सर्वसाधारणको भीड

काठमाडौं । सिरहामा प्रत्येक नयाँ बर्षको पहिलो दिन अर्थात बैशाख १ गतेमात्र फुल्ने फूल दर्शन गर्न बिहानैदेखि लहान नगरपालिका स्थित ऐतिहासिक धार्मिक तथा पर्यटकीय स्थल सलहेस फूलबारीमा सर्वसाधारणको ठुलो भिड लागेको छ । पूर्व पश्चिम राजमार्गसँगै जोडिएको लहान नगरपालिका १२ र २२ नम्वर वडामा अवस्थित धार्मिक तथा पर्यटकीय स्थल सलहेश फूलवारीमा बैशाख १ गतेकै दिन मात्र फुल्ने फुल दर्शन गर्न आउने दर्शनार्थीहरुको भिड लागेका हुन् ।

राजा सलहेसको ऐतिहासिक गाथा बोकेको सलहेश फूलबारीमा रहेको हारम जातको रुखमा फूल्ने फूल हेर्न नेपाल तथा भारतबाट लाखौंको संख्यामा प्रत्येक वर्षझैं यस वर्षपनि दर्शनार्थीहरु बिहानैदेखि भिडलाग्न थालेको स्थानिय हरिभक्त चौधरीले जानकारी बताए । सलेहश गाथामा उल्लेख गरिएअनुसार सिरहाको महिसोथामा जन्मिएका लोक नायक सलहेश फूल टिप्ने र प्रणयस्थलको रुपमा यो फूलबारी रहेको मानिन्छ ।

आफ्नो क्षेत्रमा लोक नायकको रुपमा पुजिने राजा सलहेश र प्रेमिका मालिनीको प्रेम प्रतीकको रुपमा लिइने सुनाखरी फूलको माला हेर्न मानिसहरुको भिड लाग्ने गरेको मन्दिरका पूजारी जितेन्द्र सिंह धामी जानकारी दिए ।

उनका अनुसार तेह्रौं शताब्दीका लोकनायक सलहेश र विराट राजाकी छोरी मालिनीबीच प्रगाढ प्रेम सम्बन्ध रहेको तर सलहेसले कारणवस अरु नै स्त्रिसंग विवाह गरेपनि उनीहरु विचको प्रेममा कुनै कमी नआएको भन्ने लोकोक्ती रहेको छ । सोही प्रेमको प्रतिकको रुपमा बैशाख १ मात्रै सुनाखरीको फूल फुल्ने जनविश्वास रहेको छ ।

सलहेश तराईका पासवान जातीको इष्टदेव रहेको र तेह्रौ शताब्दीका लोक नायक भएकोले सलहेशको पूजाअर्चना गर्नाले मनोकाक्षां, सन्तान प्राप्ति, चर्म रोग, कुष्ठरोगलगायतका रोग ब्याधि हरण हुने जन विश्वास समेत रहेको छ। फूलबारी भित्र दुर्लभ जातीका जडीबुटीहरु समेत रहेको बताइन्छ ।

प्रत्येक वर्ष बैशाख १ गते एक जोडी माला आकारमा फुल्ने फुल राजा सलहेश र उहाँकी प्रेमिका मालिनीको प्रेम प्रतिकका रुपमा फूल्नेगरेको जनविश्वास छ । ती माला र मेला हेर्न सिरहा, सप्तरी, उदयपुर, सिन्धुली, धनुषा, महोत्तरी, सर्लाही तथा भारतका निकटवर्ती गाउँहरुबाट सर्वसाधारणहरुको घुँइचो लाग्ने गर्दछ ।

पर्यटकीय महत्व बोकेका विभिन्न दर्शनीय स्थलहरु मध्ये सिरहाको सलहेश फुलवारी अन्य दिन पर्यटकहरु पुग्ने गरेपनि नयाँ वर्षको दिन विशेष पूजा अर्चना गर्ने श्रद्धालु भक्तजनहरुको ठूलो भिड लाग्ने गरेको छ । हरेक वर्षको चैत मसान्त र वैशाख संक्रान्तिका बेला दुई दिन मात्र फुलेर मालाको आकार ग्रहण गर्ने सलहेशको सुगन्धका लागि निकै मानिस भेला हुन्छन् र ठूलो मेला पौराणिककालदेखि लाग्दै आईरहेको छ ।

दर्शनार्थीहरुको सहजताको लागि फूलबारी क्षेत्रभन्दा बाहिरमा सबैलाई सहज हुनेगरी सामान विक्रिका स्टलहरु निर्माण गर्न दिईएको मेला समितिले जनाएको छ । मुकेश कुमार यादव,

# अहिलेसम्म कोही जीवित फर्किन नसकेको टापुबाट सकुशल फिर्ता

काठमाडौं । एक अमेरिकी पर्यटक गोप्य रूपमा विश्वको सबैभन्दा खतरनाक र पृथक टापु मानिने भारतीय टापु सेन्टिनेल आइल्याण्डमा पुगे र त्यहाँका मानिसहरूका लागि कोकको क्यान पनि छोडे। जबकि, यस्तो कुनै पनि काम गर्न पूर्ण रूपमा निषेध गरिएको छ। किनभने त्यहाँ जाँदा उसको मृत्यु हुन सक्थ्यो।

एक अमेरिकी पर्यटकलाई दुर्गम टापुमा रहेको प्रतिबन्धित अभयारण्यमा यात्रा गरेको र विश्वको सबैभन्दा पृथक जनजातिलाई “प्रसाद” को रूपमा कोकको क्यान छोडेको आरोपमा पक्राउ गरिएको छ।

अमेरिकाका २४ वर्षीय मिखाइलो भिक्टोरोविच पोल्याकोभलाई सोमबार भारतको अण्डमान निकोबार टापुमा पक्राउ गरिएको छ। उनले अनुमति बिना उत्तरी सेन्टिनेल टापुमा रहेको प्रतिबन्धित आदिवासी आरक्षको भ्रमण गरेको आरोप छ। जहाँ जान निषेध गरिएको छ।

पोल्याकोभ मार्च २६ मा अण्डमान निकोबार टापुको राजधानी पोर्ट ब्लेयर पुगेका थिए । तीन दिन पछि उनले कुर्मा डेरा समुद्र तटबाट उत्तरी सेन्टिनेल टापुसम्मको २५ माइलको सिधा यात्रा एउटा अस्थायी डुङ्गामा गरे ।

उनी बिहान १० बजे निषेधित टापुको उत्तर-पूर्वी तटमा आइपुगे र दूरबीनको प्रयोग गरेर जीवनका संकेतहरू खोज्न क्षेत्रको सर्वेक्षण गर्न थाले। पोल्याकोभले ध्यान आकर्षित गर्न आफ्नो डुङ्गाबाट सिट्टी बजाउँदै लगभग एक घण्टा बिताए, तर कुनै प्रतिक्रिया पाएनन्।

प्रहरीले प्रेस ट्रस्ट अफ इन्डियालाई बताएअनुसार त्यसपछि उनी लगभग पाँच मिनेटको लागि टापुमा गए, बालुवाको नमूनाहरू सङ्कलन गरे, आफ्नो गो प्रोमा भिडियो रेकर्ड गरे र सेन्टिनेली जनजातिको लागि सोडाको क्यान र नरिवल छोडे ।

स्थानीय माझीहरूले पोल्याकोभ त्यस साँझ कुर्मा डेरा समुद्र तटमा फर्केपछि उनको गतिविधिको बारेमा प्रहरीलाई जानकारी गराए। त्यसपछि उनलाई पक्राउ गरी थप सोधपुछको लागि हिरासतमा राखिएको थियो।

उत्तरी सेन्टिनेल टापुमा बसोबास गर्ने सेन्टिनेलीज जनजातिलाई विशेष गरी कमजोर समूह मानिन्छ। तिनीहरू बाहिरी व्यक्तिहरूप्रति शत्रुतापूर्ण रहेको बताइएको छ र विगतमा टापुमा भ्रमण गर्ने वा अवतरण गर्ने मानिसहरूको हत्या गरेका छन्।

पोल्याकोभ मार्च २९ मा दिउँसो १ बजे कुर्मा डेरा बीचबाट निस्केका थिए र जीपीएस नेभिगेसन प्रयोग गरेर बिहान करिब १० बजे उत्तरी सेन्टिनेल टापुमा आइपुगेका थिए। प्रहरीले प्रतिबन्धित क्षेत्रको यात्रा गर्न सावधानीपूर्वक योजना बनाइएको बताएको छ । उनले यात्रा सुरु गर्नु अघि समुद्री अवस्था, ज्वारभाटा र प्रवेश बिन्दुहरूको अध्ययन गरेको आरोप छ।

उनी त्यही दिन साँझ ७ बजेतिर समुद्र तटमा फर्किए जहाँ प्रहरीले उनको डुङ्गा, एउटा आउटबोर्ड मोटर र एउटा गोप्रो क्यामेरा जफत गर्यो। त्यसमा प्रतिबन्धित टापुमा उनको अवतरणको भिडियो थियो। अनुसन्धानकर्ताहरूले पोल्याकोभले यस क्षेत्रमा रहँदा अरू कहाँ यात्रा गरेका थिए भनेर पनि पत्ता लगाउने प्रयास गरिरहेका छन् र पोर्ट ब्लेयरमा उनी बसेको होटलका कर्मचारीहरूलाई सोधपुछ गरिरहेका छन्। बुधबारसम्म, उनी थप सोधपुछको लागि हिरासतमा छन्। उनलाई पक्राउ गरिएको बारेमा अमेरिकी दूतावास, विदेश मन्त्रालय र गृह सुरक्षा विभागलाई जानकारी गराइएको छ।

सेन्टिनेली जनजातिलाई बाह्य खतराबाट जोगाउने प्रयासमा भारतीय अधिकारीहरूले उत्तरी सेन्टिनेल टापुको यात्रामा प्रतिबन्ध लगाएका छन्। विज्ञहरूले पोल्याकोभको यात्राको प्रयासलाई “अत्यन्तै चिन्ताजनक” भनेर वर्णन गरे । अधिकारीहरूका अनुसार त्यहाँका मानिसहरूमा इन्फ्लुएन्जा वा दादुरा जस्ता सामान्य रोगहरू विरुद्ध पनि प्रतिरोधात्मक क्षमता छैन, र त्यस्ता रोगहरूले उनीहरू “पूर्ण रूपमा नष्ट” हुन सक्छन्।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

\- प्रेमचन्द

## सम्पादकीय

### नयाँ वर्ष २०८२ सबैका लागि मङ्गलमय बनोस् !

बितेको २०८१ साल नेपाली जनताका लागि खासै सुखद रहेन । गत वर्ष नेपाली राजनीतिमा राजनीतिक दलहरु बीच सत्ता प्राप्तिकै दौडमा लागेको देखियो । देशमा अस्थिर राजनीतिको कारण विगतमा आफूलाई राजतन्त्रको हिमायती मान्ने र बर्तमानमा गणतान्त्रिक संविधानको बुई चढेर निर्वाचन मार्फत संसदको सुविधा भोग गर्दै आएका राप्रपाले राजतन्त्र पुनः प्राप्तीको आन्दोलन शुरु गरेको छ । जबकि यो देश, जनता र देशको सार्वभौमसत्ता माथिको नाङ्गो हस्तक्षेपकारी र देश प्रतिको गद्दारी अर्थात देशद्रोही कार्य पनि हो । किनकी कुनै पनि देशमा संविधान र जनताको सार्वभौमसत्ता विरुद्ध कुनै अर्को शासन व्यवस्था प्राप्त गर्ने आन्दोलन राष्ट्रद्रोही कार्य हो । तर बर्तमान शासनसत्तामा रहेका दुई ठूला दल र प्रमुख प्रतिपक्ष र प्रतिपक्षसमेत रमिते बन्नु देशको दुर्भाग्य र बर्तमान सत्तामा पुगेका राजनीतिक दल, तिनका नेता कार्यकर्ताहरु प्रति आम जनतामा फैलिएको नैराश्यताका कारण पनि वतृमान सत्ता साझेदार दलहरु निरीह बनेको छ ।

यही कारण पनि सत्तामा बस्नेहरूले दाबी गरेजस्तो 'स्थिरता, उन्नति, प्रगति' भएको पनि देखिँदैन भने विपक्षीले आरोप लगाएजस्तो 'सबै खत्तम' पनि भएको छैन । गत वर्ष सत्तारुढ गठबन्धन फेरि बदलियो । संसद्का ठूला दुई मिलेर सामान्यत संसदीय अभ्यासविपरीत देखिने गठबन्धन बनाए । प्रतिनिधि सभामा ढुक्कको बहुमत भएको सरकारले विशेषगरी अर्थतन्त्रको सुधारमा केही नयाँ कदम चाल्ने अपेक्षा भने आंशिकरूपमा मात्र चरितार्थ भयो ।

त्यतिबेला सम्पत्ति शुद्धीकरण तथा आतंकवादी गतिविधि नियन्त्रण गर्न सहयोग पुग्नेगरी 'कानुन निर्माण' र कार्यान्वयन गर्ने प्रतिबद्धता जनाएपछि सन् २०१४ मा 'ग्रे लिस्ट' बाट हटाइएको थियो । यसपटक पनि सरकारले कानुन निर्माणका साथै 'सम्पत्ति शुद्धीकरणमा अनुसन्धान र अभियोजनलाई थप प्रभावकारी बनाउने' प्रतिबद्धता प्रकट गरेको छ ।

अर्कातिर, सरकारले विभिन्न मितिमा गरेका सामान्य सुधारले अर्थतन्त्रमा आंशिकरूपमा सकारात्मक सङ्केत देखिएको भने निजी क्षेत्र पनि केही उत्साहित भएको छ । नीतिगत स्थिरता तथा सुधारमा निरन्तर रहने एवं कार्यान्वयनमा अवरोध नहुने हो भने आउने वर्ष सकारात्मक प्रभाव पर्ने अपेक्षा गर्न सकिन्छ । राजनीतिमा खासै उत्साहप्रद नभए पनि चैत १५ को 'तीन कुने ताण्डव'पछि ठूला राजनीतिक दलका नेताहरू गणतन्त्रका पक्षमा एकै स्वरमा मुखरित भए । यसले गणतन्त्रप्रति जनविश्वास बढाएको हुनुपर्छ । सत्तारुढ गठबन्धनमा खासै खटपटको सङ्केत नदेखिएकाले स्थिरताको पनि सन्देश दिएको छ ।

यसैले यो वर्ष २०८२ मा देशले ठूलै फड्को मार्ने आशा राख्नु सायद सही हुँदैन । यस्तै, निराशाको खेती गरेर जनमानसलाई दिग्भ्रमित बनाउन खोज्नेहरूको पनि चाहना पूरा हुने देखिँदैन । यद्यपि, सबै क्षेत्रमा क्रमिक सुधारको सम्भावना भने बलियै देखिन्छ । आशा गरौं, यो वर्ष प्रमुख राजनीतिक दलका शीर्ष नेताहरू जनभावनाको सम्मान गर्न अग्रसर हुनेछन् । नेपाली समाज थप सहिष्णु, उदार र लोकतान्त्रिक हुनेछ । नेपाल शान्ति, समृद्धि र प्रगतिको मार्गमा अग्रसर हुनेछ ।

हाम्रा पाठकहरू, सहकर्मीहरू, विज्ञापनदाताहरूलगायत सबै शुभेच्छुकहरूका लागि विक्रम संवत् २०८२ मङ्गलमय

# लिम्बुवानका मुन्धुमी सम्पदाको नालीबेली–४

● *अमित थेबे 'मिहाङ'*

याङरुपका प्रतापी राजा हिल्लिहाङ योङहाङको दरबार, विजयपुरका विजयनारान राय लिम्बुले स्थापना गरेको विजयपुर दरबार पनि सम्पदाका रूपमा लिन सकिन्छ । उनीहरू थिवोङ याक्थुङकै उत्तराधिकारीहरू पनि हुन् । यसैगरी, संखुवासभाको बाह्रबिसे बजार जहाँ लिम्बुवानका सरदार काङ्सोरे र गोर्खाली सरदार रघु रानाबीच युद्ध भएको थियो ।

सिद्धिपुर गढीस्थित योद्धाहरूले आफ्ना हतियार धार लगाएको विशाल ढुंगा, चैनपुर गढी, छथरस्थित खेवाको ताक्लुङ गढी, फेदापमा ताप्पेसो पेरुहाङको गढीको अवशेष, सुम्जिरी सुम्हा?लुङ, मावर पावरक, राजा ओझाहाङको दरबारलाई सूचीकृत गर्न सकिन्छ । यसैगरी, सिरिजङगा लिपिका आविष्कारक, विकासकर्ता र प्रचारक सिरिजङ्गा सिं थेबेसँग सम्बन्धित रहेका ओढार, ढुङ्गा, खेत आदिलाई पनि ऐतिहासिक स्थलका रूपमा संरक्षण गर्न सकिन्छ ।

मानवनिर्मित सम्पदा

ऐतिहासिक, पुरातात्विक र मुन्धुमी स्थलहरूबाहेक आधुनिक र समसामयिककालमा निर्माण भएका याक्थुङसँग सम्बन्धित स्थल या सिर्जनाहरूलाई पनि सम्पदाका रूपमा समेट्न सकिन्छ । विश्व सम्पदा सूचीमा कतिपया मानवनिर्मित संरचनाहरू पनि परेका छन् ।

लिम्बुवानको हकमा समेत खासगरी राणाकालपछाडि निर्माण भएका संरचना, स्थल र वास्तुकलाहरूलाई मानवनिर्मित आधुनिक सम्पदाका रूपमा लिन सकिन्छ । तेह्रथुमको लालीगुराँस नगरपालिकाभित्र करिब १५० रोपनीमा निर्माण भएको याक्थुङ सँस्कृति झल्काउने चो?लुङ पार्क, इलामको माङ्सेबुङमा किरात धर्मावलम्बी/सत्यहाङ् मापन्थीहरूले निर्माण गरेको लारुम्बा, धरान उपमहानगरपालिकाको कागुनेमा १८ कट्ठा जग्गामा निर्माण भइरहेको सावायेत्हाङ पाङ्भे(आठ राजा बस्ने गाउँ), विभिन्न याक्थुङ व्यक्तित्वको स्मृतिमा बनाइएका शालिक, संरचना, पोखारी, बगान आदिलाई मानवनिर्मित सम्पदाका रूपमा राख्न सकिन्छ ।

अमूर्त साँस्कृतिक सम्पदा

सन् २०१२ मा किरात याक्थुङ चुम्लुङले याक्थुङ समुदायको अनुष्ठानमा प्रचलित मौखिकशास्त्र मुन्धुमलाई विश्व अमूर्त साँस्कृतिक सम्पदाको सूचीमा समावेश गराउन नेपाल सरकारसमक्ष माग गरेको थियो । युनेस्कोले सन् २००३ मा पारित अमूर्त साँस्कृतिक सम्पदा संरक्षणसम्बन्धी महासन्धिअन्तर्गत युनेस्को सूचीमा समावेश गराउन माग गरेको थियो ।

चुम्लुङको आठौं महाधिवेशनको प्रस्तावसँगै मुन्धुमका विज्ञहरू सम्मिलित धरानमा भएको याक्थुङ मुन्धुमको राष्ट्रिय गोष्ठीले मानवताको मौखिक र अमूर्त सम्पदाको श्रेष्ठ कृतिका रूपमा मुन्धुम भएको ठहर गरेको थियो । महासन्धिको धारा २ को उपधारा २ मा उल्लिखित ५ परिभाषामध्ये मुन्धुमले ३ वटा परिभाषाको मापदण्ड पूरा गर्छ । तीमध्ये कुनै एकभित्र पर्ने पनि सम्पदा हुने प्रावधान छ ।

अमूर्त सांस्कृतिक सम्पदाको संवाहकका रूपमा भाषासहितका मौखिक परम्परा तथा अभिव्यक्ति, सामाजिक व्यवहार, अनुष्ठान तथा चाडपर्वका उत्सवलाई युनेस्कोले सम्पदाका रूपमा परिभाषित गरेको छ । यस्तै प्रकृति र ब्रह्माण्डसम्बन्धी ज्ञान तथा व्यवहार त्यसमा छन् । श्रुति परम्पराका रूपमा साँस्कृतिक अनुष्ठान पर्वहरूमा प्रचलित मुन्धुममा ब्रह्माण्डको सृष्टि, मानव उत्पत्ति, सभ्यताको विकासका आख्यानहरू छन् ।

सृष्टिकर्ताका दूत मानिने येबा, येमा, साम्बा, फेदाङ्माद्वारा सांस्कृतिक अनुष्ठानमा मुन्धुम फलाकिने गरिन्छ । पछिल्लो समयमा यसलाई लिपिबद्ध गरिए पनि यसको मौलिक मौखिक परम्परामा केन्द्रित रहेकाले लोप हुने जोखिममा छ । मुन्धुम सङ्गीतलाई पनि अमूर्त साँस्कृतिक सम्पदाका रूपमा संरक्षण गर्न सकिन्छ । यसमा भएका लय, वाचन पद्धति, सङ्गीत पनि अन्यभन्दा भिन्न छ ।

संरक्षण र सम्वर्धन को सवाल

राज्य र गैरराज्यको लामो समयको उदासीनता र अनुदार नीतिका कारण ऐतिहासिक स्थल, प्राकृतिक स्रोत, चिहान, समाधिस्थल, मुन्धुमी तथा पुरातात्विक स्थलहरूको पर्याप्यत मात्रामा संरक्षण, सम्वर्धन, प्रवर्धन र प्रचार हुन नसकेको हो । यी स्थल तथा संरचनाहरू समुदायको सम्पत्ति मात्रै नभएर प्रदेश, देश र विश्व मानव सभ्यताकै निधि हुन् । यी स्थलले याक्थुङ समुदायलाई लिम्बुवानको भूमिपुत्र वा आदिवासी/मूलवासीका रूपमा पनि स्थापति गर्दछ । याक्थुङ मानवपूर्खाद्वारा आर्जित अमूल्य सम्पत्ति हो मुन्धुम ।

मुन्धुमलाई आफ्नो जीवनदर्शन तथा समाज र समुदायकै मार्गदर्शक मानेर बाँचिरहेका याक्थुङ लिम्बुहरु मुन्धुमलाई नै मूल मियो मान्दछन् । पछिल्लो समयमा मुन्धुमसम्बन्धी निक्कै महत्वपूर्ण खोज, अन्वेषण तथा अनुसन्धानहरु भएका छन् । स्थानीय सरकार, प्रदेश र संघीय सरकारले मुन्धुमी स्थलहरूलाई संरक्षण गर्दै मूर्त र अमूर्त सम्पदाका रुपमा प्रचार गरेर आन्तरिक र बाह्य पर्यटक आकर्षित गर्न सकेको छैन । त्यसतर्फ पनि कम ध्यान दिएको छ । पुरातत्व विभाग नेपालको प्राचीन ऐतिहासिक, साँस्कृतिक र पुरातात्विक सम्पदाको लेखाजोखा, वर्गीकरण तथा संरक्षणका लागि काम गर्ने सरकारी निकाय हो ।

वि.सं. २००९ देखि २०३८ सम्म शिक्षा मन्त्रालय र पछि वि.सं. २०६८ यता संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयअन्तर्गत रहेको छ । विभागले मुन्धुमी तथा ऐतिहासिक स्थलहरूको संरक्षण, सम्वर्धन र प्रवर्धनका लागि प्रचलित अन्तर ाष्ट्रिय मापदण्डहरू पूरा गरेर उत्खनन र अन्वेषणको कार्यको सञ्चालन गर्नुपर्छ । यसका लागि याक्थुङ समुदायको प्रथाजनित संस्था र प्रतिनिधिमूलक संघसंस्थाहरूसँग समन्वय र सहकार्य गरेर जानुपर्छ ।

आदिवासीहरूको भूमि, संस्कृति, सामूहिक अधिकार, परम्परागत संस्था तथा कानून र अभ्यासको अधिकारलाई सुनिश्चित गर्दै उनीहरूको सामाजिक इतिहास, अस्तित्व र प्राचीन पहिचानसँग सरोकार राख्ने स्थल, क्षेत्र र भूगोल भएको हुनाले राज्यले नै स्थानीय र प्रादेशिक तहमा सूचीकरण र अभिलेखीकरण गर्नुपर्छ । यी स्थलहरू सम्बन्धित समुदायबाहेका समुदायमा हस्तान्तरण हुन नसक्ने गरी करार गर्नुपर्छ । यसको स्वामित्व सम्बन्धित समुदायमै रहने गरी कानूनहरू निर्माण गरिनुपर्छ ।पहिचानलाई साँस्कृतिक पर्यटन र जनजीविकासँग जोड्नुपर्छ ।

पहिले पहिले येवा येमानी, साम्बा र फेदाङ्माहरुले आफ्नो मौलिक शैलीमा फलाक्दा आउने भौतिक स्थलहरु र ती भौतिक स्थललाई सभ्यताको रुपमा विस्तार गर्ने याक्थुङ लिम्बुका पुर्खाहरुका नाम सुन्दा काल्पनिक लाग्ने गरेको थियो । माया र एज्टेक, मिश्र, बेविलोन, मेसोपोटामिया, लुम्बिनी, ह्वाङ् हो देखि महेन्जोदाडो हरप्पा हुदै सिन्धुको सम्यताबारे व्यापक खोज अनुसन्धान भइरहँदा याक्थुङ मुन्धुमले बर्णन गरेका भौतिक स्थलहरुबारे याक्थुङ समुदाय र राज्य दुवै जिम्मेवार बन्नुपर्छ ।

यी भौतिक स्थलहरुसंग जोडिएका मुन्धुमी कथाहरूले मानव संस्कृति, संस्कार विकास हुनु केही अधिका र आचरणको वर्णन गर्दै क्रमागतरुपमा संस्कृति र संस्कारको रुपमा विकास भएका विवाह, परिवार, साइनो सम्बन्धका निर्माण समयलाई वर्णन गर्छ । याक्थुङ समुदायले भोगेका ज्ञान र अनूभुतिलाई जीवन यापनको सीप अवसरको रुपमा स्थापित गर्दै मौखिक रुपमा एक पुस्तादेखि अर्को पुस्तामा हस्तान्तरण गर्ने चलन अहिले पनि छ ।

लिम्बुको मिङ्स्रा (वंश रपुस्तौली) पहिलो पूर्खादेखि माथिका नाम पहाड, ओढार, खोला, नदी, पोखरी, पशुपन्छीसँग जोडिन्छन् । पूर्खाहरूको आत्मा पोखरी, नदीखोला, ओढार, पाहाड, हिमाल, रुखपात, पशुपन्छीजन्य वा सिङ्गो प्रकृतिमा बसेको विश्वास गरिन्छ । लिम्बु जातिका लागि प्रकृति पवित्र छ । त्यस्ता पवित्र स्थलहरू बढीजसो पहाड, हिमाल, खोला, नदी, पोखरीसँग सम्बन्धित छन् । यस्ता ठाउँ मुन्धुमी ज्ञानबाट निर्देशित छन् र यस्ता ठाउँहरू नै मुन्धुमीस्थल हुन् । याक्थुङहरूको भूमिलगायतका सम्पूर्ण सामूहिक अधिकार संरक्षणको लागि राज्यले गरेको उपेक्षाहरूलाई ज्ञात गराउन संघका मन्त्रालयहरू, संसदीय समितिहरू, एक नम्बर प्रदेशको मुख्यमन्त्रीको कायालय, संघ र प्रदेशका सांसद, जिल्ला प्रशासन कार्यालय, नगरपालिका, गाँउपालिकाहरूलाई ध्यानाकर्षण गराउन सक्नुपर्छ । लिम्बुवानका महत्वपूर्ण सम्पदा र स्थलहरूलाई प्रदेश, देश र विश्वको सम्पदा सूचीमा सूचीकृत गराउनुपर्छ ।

उपसंहार

हिजोको सावा येहाङ रआदिम आठ पूर्खाकालमा मुन्धुमी सभ्यताको निर्माण भयो । ताप्लेजुङको इखाबु, ताप्पेथोक, लेलेप, लुङधुङ, अथवा तमोररथाङ् वा पुम्माले सिञ्चिएका क्षेत्रहरू सावा येहाङ मुन्धुमी सभ्यता उमार्ने, हुर्काउने पवित्र स्थल हुन् ।

मुन्धुमी पहिलो मानव मुजिङ्ना खेयोङना, उनका छोराबुहारीहरू सुसुवेङ लालावेङ, फियामलुङमा, मुक्कुमलुङमा, त्यसपछिका सन्तानहरू छुच्छुरु सुहाम्फेबा, तेत्लारा लाहादङना र त्यसपछिका पुस्ता मिक्नुसो लुम्माहाङ, लालासो पाङबोहाङ, नियारा थोक्चङहाङ, सगिम्सो सङिमहाङ, फुरुप्सो थेजङहाङ, खेच्चुयेत उप्पानहाङ, साउन्दु उन्दुहाङ, सेच्छेरे सेनिहाङ यी आठ याक्थुङ्बा लिम्बुहरू नै सावा येहाङ थिए । सावा येहाङहरूले आफू बाँच्नका लागि प्रकृतिसँग सामना गरेको संघर्षलाई नै सावा येहाङकाल सभ्यता थियो ।

तर, आज यस्ता सेहाङ सभ्यताका मुन्धुमी स्थलहरू, मुन्धुमी ज्ञान नष्ट भइरहेका छन् । एकातिर बाह्य धर्मको साँस्कृतिक आक्रमण छ भने आन्तरिक रूपमा समेत साँस्कृतिक र धार्मिक विचलनहरू देखा परेका छन् । नेपाल सरकारले २०७७ वैशाख १ गते गठन गरेको भूमि आयोगले पर्ति वा सार्वजनिक जग्गाहरू के कति छन् भनेर स्थानीय तहबाट लगत संकलनार्थ सर्कुलर जारी गरेपछि याक्थुङ(लिम्बू) हरूले विरोध जनाएका पनि थिए ।

याक्थुङ (लिम्बू)समुदायको ऐतिहासिक मुन्धुमी स्थलहरू, धार्मिक, सास्कृतिक स्थल, समाधिस्थल, प्रथाजनित भूमिहरू याक्थुङ आदिवासीहरूले सदियौकालदेखि सामुहिक रुपमा उपभोग गर्दै आएको जग्गा भएको र सरकारको ऐन कानूनले व्याख्या गरे जस्तो पर्ति वा सार्वजनिक जग्गा होइन । सामुहिक रुपमा समुदायहरूले उपभोग गर्ने प्रचलन आदिवासी याक्थुङहरूको प्रचलनलाई ऐन कानुनले नबुझ्ने भएकाले भूमि आयोगको काम कारवाहीको विरोधाभाषपूर्ण छ याक्थुङहरूले सामुहिक रुपमा उपभोग गर्दै आएको परम्परागत भूमिहरू, मुन्धुमी स्थल, समाधिस्थलहरू समुदायको नाममा गाउँपालिका, नगरपालिकाहरूले दर्ता गर्नुपर्छ ।

मुन्धुमी तथा ऐतिहासिक स्थलहरूको सूचीकरणपछि सम्बन्धित समुदायको सहभागिता, स्वामित्व र अपनत्व ग्रहणपश्चात राज्यले बृहत परियोजनामार्फत् संरक्षणका लागि नीति निर्माण गर्नुका साथै प्राथमिकीकरण गर्दै कार्यान्वयनमा लैजानुपर्छ । खबरहबबाट ॥

**समाप्त**

# एनएसएलमा अनुशासनहीन व्यवहार

काठमाडौं । एनसेल नेपाल सुपर लिग (एनएसएल) मा सशक्त प्रदर्शन गरिरहेको टिम हो, धनगढी एफसी । धनगढी एक खेल अगाडि नै पहिलो क्वालिफायरमा प्रवेश गर्न पनि सफल भैसकेको छ। तर धनगढीले हिजो दशरथ रंगशालामा झापा एफसीसँगको खेलका दौरान धनगढीका अफ्रिकी खेलाडी अफिज ओलावालेले अनुशासनहीन व्यवहार गरे ।

उनी प्लेइङ इलेभेनमा थिएनन्। ६८ औं मिनेटमा मोहम्मद अल जेलाई रिप्लेस गर्दै मैदान छिरेका थिए । निर्धारित ९० मिनेटको खेलमा धनगढीले १-० को अग्रता पनि बनाएको थियो। इन्ज्युरी समय ६ मिनेट थपियो। प्रशिक्षक वान मार्टिनेजले ओलावालेलाई थप गरिएको समयको पाँचौं मिनेटमा सब्स्टिच्युट गर्ने निर्णय गरेका थिए । उनको स्थानमा अशोक खवास मैदान छिरेका थिए।

त्यसपछि ओलावालेले अनुशासनको धज्जी उडाए। प्रशिक्षक मार्टिनेजलाई किन रिप्लेस गरेको भनेर मात्र सोधेनन्। पानीको बोतल ट्र्याकमा फाले। प्रशिक्षकमाथि नै जाइलाग्न खोजेका थिए। उनलाई अफिसियलहरुले सामतेर रोक्नु परेको थियो। प्रशिक्षक मार्टिनेज पनि आक्रोशित भएका थिए।

अवस्था तनावपूर्ण बनेपछि ओलावालेलाई टनेलबाट ड्रेसिङ रुममा लगियो। खेलमा अनुशासन नै प्रमुख हो। अनि खेलाडी परिवर्तन गर्ने निर्णय प्रशिक्षकको अधिकारको विषय हो। तर ओलावालेको यस्तो व्यवहार निन्दनीय र खेलको मर्यादा विपरीत थियो।

त्यस विषयमा पोस्ट म्याच कन्फ्रेन्समा प्रशिक्षक वान मार्टिनेजले ओलावालेसँग संवाद गरेर परिस्थितिलाई समाधान गर्ने बताएका छन्। उनले उक्त निर्णय 'टेक्निकल' कारणले लिएको स्पष्ट पार्दै भनेका थिए , 'सबै खेलाडी मैदानमा लामो समय खेल्न चाहन्छन्। तर निर्णय लिनुपर्ने जिम्मेवारी मेरो हो। यसलाई मैले घटनालाई सामान्य रुपमा लिएको छु।'

तर त्यो घटना न सामान्य देखिएको थियो , न त सामान्य थियो। कप्तान देवेन्द्र तामाङले भने यो घटनाबारे आफू अनविज्ञ रहेको प्रतिक्रिया दिएका थिए। प्रशिक्षकको निर्णयमा असहमति जनाउँदै आक्रामक शैलीमा प्रस्तुत हुने ओलावालेको यो व्यवहार खेलाडीको आचरणका हिसाबले निकै लज्जास्पद हो।

खेल मैदानमा केवल प्रदर्शन मात्र होइन । मर्यादा, अनुशासन र संयमताको पनि उत्तिकै महत्व हुन्छ। ेलावाले परिचित विदेशी खेलाडीमा पर्दछन् । उनी एक दशक भन्दा लामो समयदेखि विभिन्न क्लबमार्फत नेपाली फुटबलमा क्रियाशील खेलाडी हुन् ।

# कुमारीको दर्ज्यु संलापमाथि पोखरामा चर्चा

पोखरा । साहित्यकार कुमारी लामाको निबन्ध सङ्गह 'दर्ज्यु संलाप' माथि शनिवार पोखरामा चर्चा गरिएको छ । र्‍यान्डम रिडर्स सोसाइटीद्वारा आयोजित कार्यक्रममा कृतिमाथि परिचर्चा गर्दै साहित्यकार कुमार तामाङले दर्ज्यु संलापमा तामाङ समुदायमाथि सिङ्गै राज्यले गरेको विभेदको जबाफ खोजिएको बताए । प्रस्थान नामक उपन्यासका लेखकसमेत रहेका तामाङले दर्ज्यु संलापमा आख्यानात्मक निबन्धहरू समेटिएको धारणा राखे ।

"सामाजिक कुरीति, कुसंस्कार, विभेद, अन्यायप्रति सिर्जनशील विद्रोह बनेकी छन् निबन्धकार" कुमारले भने, "सभ्यता, धर्म, संस्कारको झेली खोलभित्र लुकाइएको असभ्य, अधार्मिक अनि कुसंस्कारी अभ्यासमाथि रचनात्मक विद्रोह पोखिएको छ कृतिभित्र ।" नेपाली समाजको जीवन्त प्रतिविम्बका रूपमा कृति आएको भन्दै उनले कृति पठनीय रहेको विचार राखे ।

सोसाइटीका अध्यक्ष रुपिन्द्र प्रभावीको अध्यक्षतामा भएको कार्यक्रममा निबन्धकार कुमारी लामाले खास गरी तामाङ समुदायका विश्वासहरूलाई समेटेर निबन्ध लेखेको बताइन् । समावेशी समाजको आवाजलाई मुखरित गर्ने प्रयास गरेको बताउँदै लामाले आदिवासी सौन्दर्य चेतनाका साथै पृथ्वीमा भएका सम्पूर्ण अस्तित्वलाई सम्बोधन गर्नुपर्ने धारणा निबन्धमार्फत प्रस्तुत गरेको भनाइ राखिन् । रैथाने संस्कार र पर्यावरणमैत्री विकास हुनुपर्ने बताइन् । विकासका नाममा भएका मानव सभ्यतामाथिको अत्याचारलाई लेखकहरूले ध्यान दिनुपर्ने उनको विचार थियो ।

कोही मातृभाषीले नेपाली भाषा शुद्ध प्रयोग गर्दा ट्रोलको सिकार बन्नुपर्ने र कोही नेपाली भाषा शुद्ध प्रयोग गर्न नसक्दा ट्रोलमा पर्नुपर्ने अवस्था आएको अनुभवसमेत सुनाइन् । यसअघि ' उज्यालो अन्धकार' निबन्ध सङ्गह ल्याइसकेकी लामाको 'दर्ज्यु संलाप' दोस्रो निबन्ध सङ्गह हो । दर्ज्यु संलापमा समाज संवार्ता, सैलानी समय र दृश्य अदृश्य गरी ३ खण्डमा १७ ओटा निबन्ध समेटिएका छन् । कार्यक्रममा गौरी तमू, सुरज पौडेल, दीपक पराजुली, प्रवीण बडगामीलगायतले टिप्पणी गरेका थिए । कार्यक्रमको सञ्चालन सचिव नेपालप्रकाश अधिकारीले गरेका थिए । सोसाइटीले हरेक महिनाको अन्तिम शनिवार कुनै कृति वा विषयमाथि बहस गर्दै आएको छ ।



# मध्यपुर थिमि नगरपालिकामा मनाईने बिस्का जात्राका केही क्लिप



















## बाहिरी....

होइन, बिहानबेलुकाको छाक टार्न । ०४७-०४८ सालसम्म उपत्यकामा ठाउँअनुसार एउटा कोठा २० रुपैयँदेखि सय रुपैयाँमा पाइन्थ्यो । दुई सयदेखि एक हजार रुपैयाँमा सटर र फ्ल्याट डेढ सयदेखि पाँच सय रुपैयाँ पर्दथ्यो ।

त्यतिबेला फ्याल्ट कमै भाडामा लाग्थ्यो । अधिकांश मानिस एउटा कोठा नै खोज्थे वा लिन्थे । अहिलेजस्तो ढुंगा, सिसा, फलामको प्रयोग गरेर घर बनाइदैन्थ्यो । त्यतिबेला प्रायजसो माटोको घर हुन्थ्यो । सरकारी कर्मचारीको तलब पदअनुसार मासिक पाँच सयदेखि पन्ध्र सय रुपैयाँसम्म थियो ।

हाल कर्मचारीको तलब पदअनुसार २५ हजार रुपैयाँदेखि तलबमाथि छ। सेवासुविधा छुट्टै। केही दशकमै कर्मचारीको तलब सयौं गुणा बढीले बढ्यो, घरभाडा हजारौं गुणाले बढ्यो त जग्गाको मूल्य पनि त्यसरी नै बढ्यो । अहिले देशमा मन्दी आउँदा घरजग्गा पहिलाकै मूल्यमा फर्किने देखिन्छ ।

उपत्यकामा बसोबास गर्दै आएका बाहिरी जिल्ला जनता धमाधम आफ्नो गाउँघर फर्किरहेका छन् । उनीहरु फेरि उपत्यकामा आउने सोचमा छैनन् । अनि बाहिरी जिल्लाकै मानिसका कारण बढेको घरभाडा र जमिनको मूल्य उनीहरु नै नभएपछि पहिलाकै मूल्यमा फर्किनु नौलो कुरा होइन ।

उपत्यकाका घरधनीहरुले रातारात कमाए, बाहिरी जिल्लाका जनतालाई ठगेर, लुटेर । मासिक एक सय रुपैयाँ भाडामा नलाग्ने कोठाकै चार हजारदेखि २० हजार रुपैयाँसम्म असुले । एउटा सटरको २५ हजारदेखि १९ लाख र एक फ्ल्याटको ३० हजारदेखि तीन लाख रुपैयाँसम्म असुले ।

खाली सटर त २० लाखदेखि ६० लाख रुपैयाँसम्ममा बेचबिखन गरे । बाहिरी जिल्लाका जनता उपत्यका पसेर व्यापार व्यवसायमा लागे । त्यसको फाइदा चाँहि यहाँका घरधनीहरुले उठाए । उनीहरुको मजबुरीको फाइदा उठाएर एक्कासी भाडा बढाए ।

भाडा चर्को लिने सेवासुविधा चाँहि केही पनि छैन। घरधनीहरुले डेराबहालमाथि अत्याचार नै गरे । त्यसको भुक्तान अहिले उनीहरु आफैंले गर्नुपरिरहेको छ । भाडामा लगाउन बैंकबाट करोडौंका करोडौं ऋण लिएर घर बनाइयो । अहिले घर खाली भएपछि घरधनीहरुको निद्रा र भोक नै हराएको छ ।

एकातिर बैंकको साँवाब्याज बढेको बढ्यै छ, अर्कोतिर घर भाडामा लाग्दैंन । न त सस्तोमा दिन खोज्दासमेत बिक्री नै हुन्छ । अहिले जनतालाई बिहान-बेलुकाको छाक टार्नसमेत धौंधौं परेको छ । अनि यस्तो अवस्थामा कसले घरजग्गा किन्छ ? कसले राज्यलाई कर तिर्छ ?

सरकारको आम्दानी केही छैन। खर्च चाँहि बढेको बढ्यै छ। जनता कर नतिर्ने सोचमा छन् । घरजग्गा, गाडी, सेयरलगायत केही पनि नकिन्ने उनीहरु बताउँछन् । छोराछोरी विदेशमा रहेका आमाबुबा रेमिट्यान्स नपठाउन भनेका छन् ।

आफ्ना छोराछोरीले रगतपसिना बगाएर कमाएको पैसामा नेताहरुले मोजमस्ती गर्दा रहेछन् भनेर उनीहरुले थाहा पाएका छन् । यता, विदेशी ऋण २७ खर्ब पुगिसक्यो । देशभित्र समेत सरकार ऋणको पासोमा छ । निर्माण व्यवसायको ४५ अर्ब, दुध र उखु किसानको सात अर्ब र कोरोना महामारीको बेला बीमा गराएका अस्पतालहरुको २४ अर्ब भुक्तानी सरकारले दिन सकेको छैन ।

सहकारी, लघुवित्त र फाइनान्स त डुबेसके । अब बैंकमा पनि संकट आउने देखिन्छ । किनकि बैंकको पनि लगानी घरजग्गा, गाडी र सेयरमै छ । सहकारीले करोडौं बचतकर्ताको खर्बौं रकम यिनै क्षेत्रमा लगानी गरेको थियो । कोरोना महामारीपछि यो क्षेत्रमा आएको मन्दीले सहकारी भाग्नुपरेको हो ।

हुन त जोखिमपूर्ण र अनुपात्दाक क्षेत्रमा लगानी गर्नुको परिमाण यही नै हुन्छ । घरजग्गा, गाडी र सेयर निकै जोखिमयुक्त क्षेत्र हुन् । यसबाट न जनतालाई फाइदा छ न देशलाई । तर, दलालीहरुले सोझासाझा सर्वसाधारण उल्लु बनाई लगानी गर्न लगाए ।

त्यतिमात्र होइन, बैंक तथा वित्तिय संस्थाका सञ्चालक, अध्यक्ष र कर्मचारीलाई कमिशन दिएर सर्वसाधारणको मेहेनतको कमाई यो क्षेत्रमा लगानी गर्न लगाए । सरकारले पनि दलाल, माफियाहरुलाई प्रोत्साहन गर्यो । घरजग्गा, गाडी र सेयरलाई मात्र राजस्वको स्रोत बनायो ।

जसका कारण आज जनताको पैसा त जोखिममा पर्यो नै सँगै देशको अर्थतन्त्रसमेत संकटमा परेको छ । अर्थतन्त्र डामाडोल बनेको छ । जुनसुकै बेला पनि मुलुकको अर्थतन्त्र टाट पल्टिन सक्छ । यस्तो अवस्थामा शिक्षकहरु चाँहि सेवासुविधा बढाउनुपर्ने माग राख्दै आन्दोलन गरिरहेका छन् ।

योभन्दा लज्जास्पद कुरा के होला । पढाउन छोडेर शिक्षकहरु सेवासुविधा बढाउन आन्दोलन गरिरहँदा राजनीतिक दलहरुले उनीहरुलाई समर्थन गरिरहेका छन् । यहाँ कसैलाई देशको चिन्ता छैन, सेवासुविधा र कार्यकर्ता बढाउनु मात्र छ ।

देश रहे त हामी रहन्छ, देशै नरहे सेवासुविधार कार्यकर्ता बढाएपनि के गर्नु ? दुर्भाग्य शिक्षित भनिएका शिक्षकहरुसँगै यति सोच्नसक्ने क्षमता छैन । शिक्षाजस्तो अति आवश्यक विषयमा राजनीति गर्ने कोशिस भइरहेको छ । त्यसैले, अब सरकारले शिक्षकहरुको माग सम्बोधन होइन, नियुक्तिपत्र चाँहि खारेज गर्नुपर्छ ।

जनताका छोराछोरीको भविष्यमाथि खेलबाड गर्ने अधिकार शिक्षकसँग छैन । अधिकार मात्र नखोजौं, आफ्नो कर्तव्य पनि पुरा गरौं । जनतादेखि जनप्रतिनिधि, कर्मचारी र राजनीतिक दलहरुकै कारण देश टाट पल्टिने अवस्थामा पुग्यो । केही वर्षपछि विश्वमा नेपाल भन्ने देशसमेत रहने छैन ।

## फोनिजको..

सम्बद्ध संस्थाका अध्यक्ष, पदाधिकारी, प्रतिनिधि सहित ६५ जिल्लाका प्रतिनिधि, पर्यवेक्षकको उपस्थिति रहेको थियो । फोनिज महाधिवेशन समुदघाटन सत्रको सभापतित्व फोनिज संघीय कार्यसमिति अध्यक्ष गजुरधन राईले गरेका थिए । यस्तै महाधिवेशन समुदघाटन समारोहमा फोनिजका वरिष्ठ उपाध्यक्ष लक्की चौधरीले स्वागत गरेका थिए भने सञ्चालन महासचिव समीर बलामीले गरेका थिए ।

फोनिजले महाधिवेशनबाट ४७ सदस्यीय संघीय कार्यसमिति निर्वाचित भएको छ । जसमा सूचीकृत अदिवासी जनजाति मध्येका केही अल्पसङ्ख्यक हिमाली, पहाडी जात-जातिहरुको प्रतिनिधित्व शून्य हुनुको मुख्य कारण राजनीतिक पार्टी निकट पत्रकार संगठनहरुकै हालिमुहाली र चलखेलबाट भएको टिप्पणी गरिएको छ ।

यिनै परिस्थितिबिच नेपाली आदिवासी जनजाति पत्रकार महासंघ (फोनिज) को अध्यक्षमा पत्रकार लक्की चौधरी निर्वाचित भएका छन् ।

नेकपा एमाले निकट प्रेस चौतारी नेपाल चौधरी फोनिजको आठौं महाधिवेशनमा निर्विरोध निर्वाचित भएका छन् । प्रमुख पदका अर्का उम्मेदवार अमरध्वज लामाले आफ्नो उम्मेदवारी फिर्ता लिएका थिए ।

अध्यक्ष सहित केही पदाधिकारीहरू निर्विरोध निर्वाचित भए पनि केही पदाधिकारी र केन्द्रीय सदस्यहरूको लागि खुला समूह अन्तर्गत निर्वाचन भइरहेको छ ।

वरिष्ठ उपाध्यक्षमा सरु राणा निर्वाचित भएकी छन् भने महिला समूह अन्तर्गत उपाध्यक्षमा अञ्जना शिल्पकार निर्विरोध निर्वाचित भएकी छन् भने समीर बलामी महासचिव र लीला दराई अल्पसंख्यक समूह अन्तर्गत सचिवमा निर्विरोध निर्वाचित भएकी छन्।

त्यसैगरी, खुला समूह अन्तर्गत विश्वराज तामाङ उपाध्यक्ष, कोषाध्यक्षमा अर्जुन तामाङ र सचिवमा मिलन गाहा, एमबी मगर र सन्दीप श्रेष्ठ निर्वाचित भएका छन्। माया पालुङ महिला तर्फ सचिवमा निर्वाचित भएकी छिन्।

नवनिर्वाचित सचिव मिलन गाहाका अनुसार अधिवेशनबाट १५ पदाधिकारी र ४९ केन्द्रीय समिति सदस्य निर्वाचित भएका छन्। लुम्बिनीमा सम्पन्न महाधिवेशनबाट वरिष्ठ उपाध्यक्षमा सरु राना मगर, उपाध्यक्ष (खुल्ला) विश्वराज तामाङ, उपाध्यक्ष (महिला) अञ्जना शिल्पकार, उपाध्यक्ष (संस्थागत) अर्जुन जम्नेली राई, उपाध्यक्ष अल्पसंख्यक यमन राईडोने, महासचिव समीर बलामी निर्वाचित भएको छ ।

त्यसैगरी खुल्ला सचिवहरुमा मिलन गाहा मगर, सन्दिप कुमार श्रेष्ठ, एमबी आस्था मगर भएको छ । संस्थागत सचिव सुनिल महर्जन, सचिव (महिला) माला पालुङवा लिम्बु, सचिव (महिला) मिला दराई, कोषाध्यक्ष अर्जुनबहादुर तामाङ, सह-कोषाध्यक्ष अश्मी स्याङतान (कमला) निर्वाचित भएको हो ।

फोनिजको प्रदेश १ को इन्चार्ज राजेन्द्र दुष्ट, मधेश प्रदेशमा इन्चार्ज शंकरलाल श्रेष्ठ, बागमती इन्चार्जमा सुरेन्द्रभक्त श्रेष्ठ, गण्डकी इन्चार्जमा रुद्र श्रीस, लुम्बिनी इन्चार्जमा गजेन्द्र गुरुङ, कर्णाली इन्चार्जमा रत्न सुनुवार, सुदुरपश्चिम इन्चार्ज रामलखन चौधरी चयन भएको छ ।

सदस्यहरुमा अतित योङहाङ, प्रदिपकुमार चौधरी, प्रज्वल श्रेष्ठ, प्रविण श्रेष्ठ, अमिर लामा चयन भएको छ । संस्थागत सदस्यहरु प्रदिपकुमार लेखी, साहिला तामाङ, दानबहादुर गुरुङ, श्याम राना मगर, सुरजवीर बज्राचार्य, महिला सदस्यहरुमा विनु चेम्जोङ, रत्ना गुरुङ, सरस्वती श्रेष्ठ, प्रतिमा चौधरी, मिक्साङ वाईबा तामाङ, सुप्रिया राई, भुमिका फियाक लिम्बु र रिया आले निर्वाचित भएको छ ।

अल्पसंख्यक सदस्यहरुमा संगीता चेपाङ र प्रितम भूजेल, विदेश सदस्य विनोद श्रेष्ठ, लेखा समिति संयोजकमा गजेन्द्र राई र सदस्यमा प्रविणकुमार गाहा निर्वाचित भएको हो ।

भगवान गौतम बुद्धको जन्मस्थल लुम्बिनीस्थित लुम्बिनी विश्वविद्यालयको सभा भवनमा समापन भएको फोनिज महानिवेशनबाट गौतम बुद्धले प्रतिपादन गरेको शिलको पालना गर्ने समृद्ध नेपाल निर्माणमा गौतम बुद्धको विषयमा प्रचार प्रसार गरी आन्तरिक तथा बाह्य पर्यटनमा सम्प्रवर्धन तथा प्रवर्धनमा नेपाल सरकारको ध्यानाकर्षण गरी पर्यटन विकासमा जोड दिने सहित १७ बुँदे घोषणा-पत्रसमेत जारी गरेको छ ।

१. रिपोर्टिङका क्रममा गत चैत १५ गते काठमाडौंको तीनकुनेमा राजावादीले व्यक्तिको घरमा गरेको आगजनीमा परी पत्रकार सुरेश रजकको ज्यान गएको घटनाप्रति यो महाधिवेशन गहिरो दुःख व्यक्त गर्दछ । आपराधिक घटना बारे सत्यतथ्य छानबिन गरी संलग्नहरुलाई हदैसम्म कानुनी कारबाहीका लागि नेपाल सरकार र सम्बद्ध गृह प्रशासनसमक्ष यो महाधिवेशन जोडदार माग गर्दछ । यस्तै विभिन्न बहानामा पत्रकारमाथि हुने आक्रमण, कुटपिट, धाकधम्की कार्यलाई अन्त्य गरी पत्रकारलाई निर्वाद समाचार लेख्ने वातार वरण निर्माण गर्न र पूर्ण प्रेस स्वतन्त्रताको सुनिश्चितताका लागि तीनै तहको सरकारसमक्ष विशेष अनुरोध गर्दछ ।

२. विभिन्न सञ्चार संस्थामा कार्यरत श्रमजीवी पत्रकारको भौतिक सुरक्षा, पेशागत सुरक्षामा गम्भीर हुन यो महाधिवेशन संघ, प्रदेश र स्थानीय सरकारको गम्भीर ध्यानाकर्षण गराउनका साथै, सरकारले निर्धारण गरेको न्युनतम पारिश्रमिक सबै सञ्चार संस्थाहरुमा लागु गराउन र श्रमजीवी पत्रकारले सञ्चालन गरेका स्वरोजगारमूलक मिडियाको संरक्षण, प्रवर्धन र विकासमा ठोस योगदान गर्नसमेत तीनै तहका सरकारसमक्ष यो महाधिवेशन अनुरोध गर्दछ ।

३. आदिवासी जनजाति पत्रकारहरुको सङ्ख्यात्मक, संगठनात्मक र गुणात्मक वृद्धि गर्न र सीप तथा क्षमता अभिवृद्धि गर्न ठोस नीति बनाएर कार्यान्वयन गर्ने यो महाधिवेशन निरन्तर प्रण गर्दछ ।,

४. मातृभाषामा प्रकाशन प्रसारण हुने सञ्चार माध्यमहरुको आर्थिक सवलीकरण र दिगोपनाको निम्ति विशेष नीति नै बनाएर प्रवर्धनात्मक कार्य गर्न गराउन यो महाधिवेशन संघ, प्रदेश र स्थानीय सरकारसँग माग गर्दछ । साथै प्रेस काउन्सिल नेपालबाट गरिने वर्गीकरणमा मातृभाषी सञ्चार माध्यमहरुको लागि अलग्गै संपरीक्षणको व्यवस्था गर्न पुनः माग गर्दछ ।,

५. राज्यबाट वितरण गरिने विज्ञापन समानुपातिक आधारमा साना तथा ठुला सञ्चार माध्यमहरुलाई उपलब्ध गराउने कानुनी व्यवस्थाका लागि यो महाधिवेशन जोडदार माग गर्दछ । साथै, तीनै तहका सरकारले पत्रकार प्रोत्साहनका लागि प्रदान गर्दै आएको पुरस्कार, सम्मान समावेशीताका आधारमा प्रदान गर्न अनुरोध गर्दछ ।,

६. आदिवासी जनजाति, लोपोन्मुख, अल्पसंख्यक, सीमान्तकृत, महिला, अपाङ्गता, दलित, मधेसी समुदायबाट पत्रकारितामा क्रियाशील पत्रकारहरुको सीप तथा क्षमता अभिवृद्धिका लागि तालिम, लेखनवृत्ति, पत्रकारिता विषयमा निः शुल्क उच्च शिक्षा अध्ययनको व्यवस्था गर्न र अध्ययन अवलोकन भ्रमणको व्यवस्था गर्न यो महाधिवेशन तीनै तहका सरकारसमक्ष माग गर्दछ ।

७. फोनिजसमेत नेपाल पत्रकार महासंघको समानान्तर हैसियतको महासंघ भएको हुनाले नेपाल सरकार सञ्चार तथा सूचना प्रविधि मन्त्रालयले उपलब्ध गराउदै आएको अनुदान रकम र अन्य विभिन्न सेवा सुविधामा फोनिजलाईसमेत समान व्यवहार गर्न यो महाधिवेशन माग गर्दछ ।

८. ऐन, कानुनको अभावमा संघीयता कार्यान्वयनका लागि आदिवासी जनजाति लगायत महिला, दलित, मधेसी, मुस्लिम, थारु र अल्पसङ्ख्यक समुदायको निम्ति संविधानमै उल्लेख भएका अधिकारको कार्यान्वयन हुन नसकेको घटना बारे यो महाधिवेशन गम्भीर असहमति प्रकट गर्दछ । साथै, अविलम्ब आवश्यक त्यस्ता कानूनहरु निर्माण गरी कार्यान्वयनमा ल्याउन यो महाधिवेशन माग गर्दछ ।

९. प्रदेश १ मा जारी कोशी नाम खारेजी आन्दोलनप्रति यो महाधिवेशन ऐक्यबद्धता जाहेर गर्दछ । साथै, यस आन्दोलनका सम्बन्धमा राज्यको ध्यान समयमै नपुगे देश द्वन्द्वमा फस्न सक्ने गम्भीर खतरा भएको हुँदा आन्दोलनरत पक्षसँग यथाशीघ्र वार्ता र सम्वादका माध्यमबाट पहिचानका आधारमा प्रदेश १ को पुनः नामाकरण गर्न यो महाधिवेशन प्रदेशसभा, सरकार साथै सम्बद्ध पक्षहरुलाई आह्वान गर्दछ ।

१०. आदिवासी जनजाति समुदायको संस्कार, संस्कृति र परम्परासँग प्रतिकूल कानुनी प्रावधानहरु खारेज गर्न र उनीहरुको पहिचान, संस्कृति, मातृभाषा, प्रथाजनित कानून, परम्परागत अर्थ प्रणालीको संरक्षण, प्रवर्धन र विकासका लागि ठोस नीति निर्माण गरी कार्यान्वयन गर्न यो महाधिवेशन राज्यसमक्ष माग गर्दछ ।,

११. प्रदेश नम्बर १ स्थित ताप्लेजुङको धार्मिक तथा सांस्कृतिकस्थल मुक्कुमलुङमा भइरहेको सशस्त्रीकरण, सैनिकीकरण, प्रकृति विनाश कार्य तत्काल बन्द गरेर केवलकार निर्माण खारेज गर्न यो महाधिवेशन तीनै तहको सरकारलाई गम्भीर ध्यानाकर्षण गराउँदछ । साथै, प्रदेश १ को सप्तकोशी नदीमा लाखौं आदिवासी जनजाति र अन्य समुदायका मानिसलाई विस्थापित गर्ने कोशी उच्च बाँध निर्माणको सर्वेक्षण कार्य तत्काल रोक्न यो महाधिवेशन जोडदार माग गर्दछ । त्यसैगरी काठमाण्डौस्थित लप्सिफेदीको बोझ्रेनीमा विद्युत सब स्टेसन निर्माण गर्ने विषयलाई लिएर रैथाने तामाङ समुदायबाट जारी रहेको आन्दोलनलाई न्यायोचित सम्बोधन गर्न यो महधिवेशन राज्यको गम्भीर ध्यानाकर्षण गराउँदछ ।,

१२. नेपाल पत्रकार महासंघको संस्थापक अध्यक्ष सत्यनारायण बहादुर श्रेष्ठ भएको ऐतिहासिक तथ्य र प्रमाणले पुष्टि गरिसकेको हुँदा महासंघलेसमेत यस विषयमा महाधिवेशनबाटै आवश्यक अध्ययन कार्यदल बनाई निचोडमा पुग्ने प्रतिवद्धता गरे बमोजिम आवश्यक प्रक्रिया पूरा गरी संस्थापक अध्यक्ष श्रेष्ठलाई घोषणा गर्न यो महाधिवेशन नेपाल पत्रकार महासंघसँग विशेष माग गर्दछ ।,

१३. नेपाल पत्रकार महासंघमा आदिवासी जनजाति लगायत महिला, दलित, मधेसी, अल्पसङ्ख्यक समुदायका पत्रकारको प्रतिनिधित्व सुनिश्चित गर्न महासंघको निर्वाचन प्रणालीलाई पूर्ण समानुपातिक बनाउन यो महाधिवेशन माग गर्दछ ।

१४. लुम्बिनी प्रदेशअन्तर्गत धार्मिक, ऐतिहासिक, पुरातात्विक महत्व बोकेका क्षेत्रहरु रूपन्देहीस्थित भगवान गौतम बुद्धको जन्मस्थल लुम्बिनी क्षेत्रको मायादेवी मन्दिर, अशोकस्तम्भ, कपिलवस्तुस्थित भगवान बुद्धको कर्मथलोका रूपमा प्रख्यात तिलौराकोट, कपिलवस्तुकै मानव निर्मित जगदिशपुर ताल, अर्घखाँची जिल्लाको सुपादेउराली, पाल्पाको रानीमहल, प्युठान जिल्लाको स्वर्गद्वारी, गुल्मीको रेसुंगा क्षेत्र, रोल्पाको जलजला क्षेत्र, पूर्वी रुकुमको पुथा र सिस्ने हिमाललगायत अन्य विभिन्न धार्मिकस्थल र मठ मन्दिर, गुम्बा चैत्य, मस्जिदहरु, होमस्टेहरु, राष्ट्रिय निकुञ्जहरुको संरक्षण, प्रवर्द्धन र विकासका निम्ति यो महाधिवेशन तीनै तहको सरकार हरुलाई अनुरोध गर्दछ ।

१५.पूर्व-पश्चिम राजमार्गमा पर्ने दाउन्ने सडक तत्काल निर्माण सम्पन्न गर्न फोनिज सम्बन्धित निकाय र सरोकारवालासँग माग गर्दछ ।

१६. नेपाल आदिवासी जनजाति पत्रकार महासंघ "फोनिज"को आठौं संघीय महाधिवेशनका प्रमुख अतिथि नेपाल सरकारका सूचना सञ्चार तथा प्रविधि मन्त्री माननीय पृथ्वी सुब्बा गुरुङज्यू, विशेष अतिथिहरु, नेपाल पत्रकार महासङ्घका प्रतिनिधि, विभिन्न राजनीतिक दल निकट आस्था राख्ने पत्रकारजन्य संगठनका अध्यक्ष, प्रतिनिधि, महाधिवेशनको स्थानीय आयोजक र व्यवस्थापक फोनिज लुम्बिनी प्रदेश समिति र रुपन्देही जिल्ला समिति, अधिवेशनका लागि स्थान र हल उपलब्ध गराउने लुम्बिनी बौद्ध विश्वविद्यालय परिवार, फोनिजका सल्लाहकारहरु, अध्यक्ष मण्डलका अध्यक्ष र सदस्यहरु, निर्वाचन समितिका प्रमुख र सदस्यहरु, महाधिवेशन सफल पार्न रचनात्मक भूमिका खेल्नु हुने सम्पूर्ण प्रतिनिधि, पर्यवेक्षक, अहोरात्र खट्नु हुने स्वयम् सेवकहरु, फोनिजका शुभेच्छुक, सहयोगदाता संघसंस्था र महानुभावहरुमा यो महाधिवेशन हार्दिक आभार र धन्यवाद ज्ञापन गरिएको घोषणा-पत्र तयारी समितिको संयोजकमा लक्की चौधरी र सदस्यहरुमा कमन देवान, सरु रानामगर, अर्जुन जम्नेली राई र दिल श्रीस रहेका थिए ।

## मध्यपुर थिमि...

किंवदन्तीअनुसार प्राचीनकालमा बोदेमा नीलबाराहीको दायाँबायाँ बस्ने भुतप्रेत, पिशाच, ख्याक तथा कंकालले बोदेका मानिसलाई धेरै दुःख दिने गरेको त्यसलाई हटाउन तान्त्रिक भीमदत्त त्यहाँ आएर तान्त्रिक विद्याअनुसार बोदेभर पासो राखेर दुःख दिने पिशाचलाई समातेर उसको जिब्रो छेडी बलेको महाद्वीप बोकाएर बोदे शहर घुमाएपछि यो जात्राको परम्परा सुरु भएको मान्यता रहेको हो ।

जिब्रो छेड्ने व्यक्तिले तीन दिनदेखि शुद्ध भई पानी मात्र खाएर व्रत बस्नुपर्छ । एक महिनादेखि तेलमा डुबाइराखेको करिब ११ इन्च लामो सुइरोले जिब्रो छेडिन्छ । विशेष पहिरन र खुट्टामा तान्त्रिक घण्टी लगाई जिब्रो छेड्नुअघि शक्तिपीठको दर्शन गर्ने परम्परा छ ।

अहिलेसम्म १९६९ देखि १९९० सम्म हर्कनरसिंह बाँस श्रेष्ठले २२ पटक, विसं १९९१ देखि २०२२ सम्म बेखानारायण हाय श्रेष्ठ ३२ पटक, २०२३ मा हरिदेव किला श्रेष्ठले एक, २०२४ देखि २०२६ सम्म हरि भासिंक श्रेष्ठले तीन, २०२७ र २०२८ मा इन्द्र बाटा श्रेष्ठले दुई, २०२९ देखि २०३१ सम्म हर्केश्वर ब्याँ श्रेष्ठले तीन, २०३२ देखि २०३८ सम्म चन्द्रसेन घ्यों श्रेष्ठले सात, २०३९ देखि २०४६ सम्म दीलकुमार खपे श्रेष्ठले सात, २०४७ मा मुनि घ्यों श्रेष्ठले एक, २०४८ मा धर्मराज बलाय श्रेष्ठले एक, २०४९ देखि २०६० सम्म कृष्णचन्द्र बाग श्रेष्ठले १२ पटक, बुद्धकृष्ण बाग श्रेष्ठले २०६१ देखि २०६४ सम्म तथा २०७३ देखि २०७५ सम्म सात र जुजुभाइ बाँस श्रेष्ठले २०६५ देखि २०७८ सालसम्म नौ पटक जिब्रो छेडाएर जात्रालाई निरन्तरता दिएका थियो । यस अधि मध्यपुर थिमि नगरपालिकाको बालकुमारी, चपाचो क्षेत्रमा बालकुमारी माईको र सिद्धिकालीको रथ जात्रा सिन्दुर छर्केर धुमधामका साथ गरिने परम्परा रहेको छ । त्यस्तै हाल आएर सूर्यविनायक नगरपालिकाको तत्कालिन बालकोट, सिरुटारमा पनि बैशाख १ गते बिस्का जात्रा मनाइन्छ भने दधिकोटको चरखण्डीमा धेरै पहिले देखि यो जात्रा गर्ने परम्परा रहेको छ । त्यस्तै मध्यपुर थिमि कै वडा नं १ अन्तर्गत लोहकिल्थलीमा सिद्धिकालीको जात्रा हुने गरेको छ । त्यस्तै मध्यपुर थिमिकै नगदेश क्षेत्रमा त्यहाँको एकमात्र प्रसिद्ध मन्दिर सिद्धिगणेशको एकल खट जात्रा हुने गर्दछ । त्यस्तै निलबाराही जाने टिगनीमा पनि छुटै बिस्का जात्रा अन्तर्गत खट जात्रा हुने परम्परा रहेको छ। बोदे क्षेत्रमा साहसिक कार्य अन्तर्गत जिब्रो छेडाएर फरक शैलीमा बिस्का जात्रा मनाउने परम्परा रहेको छ ।

## बालकुमारी..

स्थानमा परापूर्वकालमा रहेको लिच्छवीकालिन ढुङ्गेधारा सहितको फल्या, कुवा, पुरिएर लोप भएको अवस्थामा स्थानीय कोष्ठ नागरिकहरु एवं स्वर्गीय चन्द्रलाल चपलछें श्रेष्ठ र उहाँको परिवारबाट वर र पिपलको बोट रोपेर उहाँकै परिवारबाट २०५२ सालमा वर र पिपलका बिवाहसमेत गराई ढुङ्गेधारा सहितको कल्या, कुवा निर्माण गरेको ठाउँमा महायज्ञ हुने जनाइयो ।

त्यस पश्चात उक्त स्थानमा पर्खाल लगाएर बिभिन्न देवी देवताको मूर्ति राख्ने परिकल्पना अनुसार बनाइएको आठ वटा खोपाहरुमा स्थानीयले कुमार, गणेश, भिमसेन, दक्षिणकाली, दुर्गा, सरस्वती, विष्णु र विश्वकर्माको मूर्ति स्थापना गरि पुजा गर्दै आएको जनाइयो । त्यस स्थानमा स्थानीयले नेपालीहरुकै आराध्यदेव श्री पशुपतिनाथ र नेवारहरुको आराध्यदेव बालकुमारी मन्दिर स्थापना गर्ने योजना अनुरुप महादेव र बालकुमारीको स्थापना गरिएको र प्रत्येक वर्ष वैशाख १ गते बिस्केट जात्रामा बालकुमारीको रथ यात्रा गरी सोही मन्दिरमा परिक्रमा गर्दै आएको जानकारी गराइयो ।

२०७१ सालमा तत्कालिन अनन्तलिङेश्वर नगरपालिकाको वडा नं. २ का नागरिक वडामञ्चको संयोजक रवि चपलछें श्रेष्ठसहित मोहनकृष्ण चपलछें श्रेष्ठ र विवेक भ्या श्रेष्ठको संयुक्त पहलमा सोही नगरपालिकाबाट विनियोजित रु. ७ लाख ७५ हजारको लागतमा सत्तल निर्माण सुरु भई त्यस पश्चात वागमति प्रदेश सरकारबाट आएको रु. १५ लाखबाट सोही स्वानमा दुईतलाको बालकुमारी मन्दिरको सत्तल निर्माण जारी रहेको जानकारी गराइयो ।

यस क्षेत्रको विकासका लागि चन्द्रलाल चपलछें श्रेष्ठको पहललाई निरन्तरता दिदै उक्त सम्पदाको पुर्ननिर्माणको लागि परियोजनाकै रुपमा विकास गर्न महायज्ञ आयोजक समितिका संयोजक समेत रहनु भएका इ. श्रीराम चपलछें श्रेष्ठले बिस्तृत गुरुयोजना निर्माण गरेर सोही गुरुयोजना अनुरुप उक्त मन्दिर परिषरमा बिभिन्न मठ मन्दिरलगायतका धार्मिक संरचनाहरु निर्माण गर्ने जमर्को गरेको जनाइएको छ ।

## बिदा....

सहभागी हुनपर्ने भएकोले वैशाख ३ गते (बुधबार) बिदा दिनुपरेको बताउदै निर्णयको बचाव गरेको छ ।

मण्डनदेउपुर नगरपालिकाका प्रमुख प्रशासकीय अधिकृत सुरज श्रेष्ठद्वारा जारी सूचनामा मातहतका कार्यालय, विद्यालय र संघसस्थामा बिदा घोषणा गरिएको छ र सबैलाई कार्यक्रममा उपस्थितिका लागि आमन्त्रण गरिएको छ । यस अघि पनि प्रशासकीय भवन उद्धाटनपछि थकाइ बिदा दिएको भन्दै मण्डनदेउपुर नगरपालिकाको आलोचना भएको थियो ।

मण्डनदेउपुरका नगर प्रमुख टोकबहादुर वाइवाको संयोजकत्वमा नगरकोट भ्रमण वर्ष आयोजक मूल समिति निर्माण भएको छ। नगरकोट भ्रमण वर्षका लागि काभ्रेको मण्डनदेउपुर संगै भक्तपुरको चाँगुनारायण नगरपालिका,काठमाडौंको शङ्खरापुर नगरपालिका र काभ्रेको बनेपा नगरपालिका संयुक्त आयोजक रहेका छन् । यो वर्षभरी विविध कार्यक्रम गरी भ्रमण वर्ष मनाउने र नगरकोटमा ११ लाख पर्यटक भित्राउने उनीहरुले लक्ष लिएका छन् ।

इमेल: thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# चलचित्र "द महावीर"को लागि कलाकार बन्ने अवसर

काठमाडौं । चलचित्र 'द महावीर'ले कलाकारका लागि कास्टिङ कल गरेको छ । नयाँ फेस चाहिएको भन्दै निर्माण टिमले कास्टिङ कल गरेको हो ।

सिनेमामा हेरचाह गर्ने भूमिकाका लागि जनजाति फेसको ३० देखि ४० वर्ष उमेर समूहको महिला, हल्का कालो मुहारको राम्री र राम्रो नृत्य गर्नसक्ने २० देखि २५ वर्षकी कलाकारका लागि निर्माण टिमले अडिसन आह्वान गरेको छ ।

हल्का कालो छाला भएको मिक्स जनजाति फेस देखिने १० देखि १२ वर्ष उमेरको पुरुष कलाकार, ६ फिट अग्लो आर्य फेस भएको ३५ देखि ४० वर्षको पुरुष (एथलेटिक्स)का लागि पनि माग गरिएको छ ।

४० देखि ५० वर्षको फ्याट एन्ड लेजी लुक्स भएकी जनजाति महिलाका लागि पनि कास्टिङ कल गरिएको छ । २५ देखि ३० वर्ष उमेर समूहको फिट बडी भएको जनजाति लुक्सको पुरुष पात्र चाहिएको निर्माणपक्षले बताएको छ ।

६ फिट अग्लो फिट एन्ड फाइन देखिने २५ देखि ३० (एथलेट्स) आर्य फेस, बोल्ड एन्ड कमान्डिङ ६० देखि ६५ वर्ष उमेरको जनजाति उमेरको पुरुष, ५० देखि ६० वर्षको अग्लो, स्वस्थ जनजाति फेसका लागि कास्टिङ कल गरिएको निर्माणपक्षले जनाएको छ ।

गोरो छाला भएको दृष्ट र धुर्त देखिने ५० देखि ६० वर्षको आर्य फेस भएको पुरुष कलाकार र स्मार्ट लुकिङ आर्य फेस भएको ७ देखि १० वर्ष उमेर को बाल कलाकार चाहिएकाले कास्टिङ कल गरिएको निर्माणपक्षले जनाएको छ ।

अनुभवी र नयाँ सबैलाई अवसर दिइने बताइएको छ । राम्रो अभिनय गर्ने व्यक्तिले प्राथमिकता पाउनेछन् । पहिलो चरणमा एक मिनेटको भिडियो पठाउनुपर्नेछ । वैशाख १ गतेदेखि ३ गतेसम्म भिडियो पठाइसक्नुपर्नेछ ।

दोस्रो चरणमा डिजिटल अडिसनमा छनोट भएकालाई फिजिकल अडिसन लिइनेछ । दोस्रो चरणमा छनोट भएकालाई फोन गरेर बोलाइनेछ । 'द महावीर'को थिम पोस्टर सार्वजनिक भइसकेको छ । जिबी आग्रीले निर्देशन गर्ने चलचित्रको कथावस्तु के हो निर्माणपक्षले प्रष्ट नखुलाए पनि थिम पोस्टर भने रेड एन्ड डार्क रहेकाले युद्धको पृष्ठभूमीमा कथा रहेको अनुमान लगाउन सकिन्छ ।

दुईवटा बलिष्ट घोडा दौडाएर दुईव्यक्ति आमानेसमाने भएको पोस्टरमा उल्लेख छ । बीचमा ठूलो तरवार रातो कपडाले बेरिएको अवस्थामा कसैले उठाउन तयार रहको अवस्थामा छ, यो युद्धको संकेत हो ।

चलचित्रको स्लोगन 'राइज फाइट कन्क्वेर' छ । उठ, लड र जित भन्ने स्लोगनले दुईपक्षबीचको द्वन्द्वलाई संकेत गरेको छ । चलचित्रको कथा कृष्ण बिके र जिबी आग्रीले लेखेका छन् । लक्षरा फिल्सको प्रस्तुति रहने 'द महावीर'मा कृष्ण बिके, बिआर रेड्डी, सन्तोष लुहार निर्माताको रुपमा रहनेछन् । सह-निर्मातामा रम्भा देवी र लक्ष्मण बिके रहनेछन् । कार्यकारी निर्मातामा वरिष्ठ संगीतकार सुरेश अधिकारी छन् ।

डिरेक्टर अफ फोटोग्राफीमा सरण रिसी छन् । हिन्दी र नेपाली भाषामा निर्माण हुने चलचित्रमा डल्बी एटमसको साउन्ड रहने निर्माणपक्षले जनाएको छ ।

# "हेल्लो काँशीराम" देशको व्यथितीमाथि तिखो व्यङ्ग्य

काठमाडौं । २०८२ को दोस्रो महिना जेठ २ बाट देशभरका सिनेमा घरहरूमा एकसाथ प्रदर्शनमा आउने चलचित्र 'हेल्लो काँशीराम' टिमले चलचित्रको टिजर सार्वजनिक गरेको छ । बुढासुव्वा डिजिटलको अफिसियल युट्युब च्यानलमार्फत सार्वजनिक टिजर २ मिनेट ४ सेकेण्डको छ ।

नयाँ बर्ष २०८२ को अवसर पारेर सार्वजनिक टिजर देशको व्यथितीमाथि तिखो व्यङ्ग्य गरेर तयार पारिएको छ । टिजर हेरिसकेपछि यस चलचत्रिमा नेपालको राजनीतिमा बाहिरी मुलुकहरूको हस्तक्षेपलाई नजानिँदो तरिकाले व्यङ्ग्य गरिएको बुझ्न सकिन्छ । टिजर हेर्नेहरुलाई नेपालमा शासन गर्ने नेताहरूले बाह्य हस्तक्षेपकर्तालाई देउता मानेर पूजा गर्ने प्रवृत्तिमाथि यस चलचित्रले राम्रैसँग कटाक्ष गरेको अड्कल काट्न सकिन्छ । कमेडी जनराका चलचित्र हेर्न मन पराउनेलाई यस चलचित्र निकै मिठो खुराक बन्न सक्ने देखिन्छ । टिजरमा दिलिप रायमाझीलाई एकजना पीडित बेरोजगार युवाको रूपमा प्रस्तुत गरिएको छ, जसले बेरोजगार युवाहरूको प्रतिनिधित्व गरेका छन् । रेडलाइन फिल्मस् प्रा.लि को ब्यानरमा निर्माण भएको यस चलचित्रको लेखन तथा निर्देशन रिम विश्वकर्माले गरेका हुन्, भने यस चलचित्रमा पि. वि. थापाको लगानी रहेको छ ।

यम आले डिओपी, मित्र डी. गुरुङ सम्पादक तथा रंग संयोजक रहेको चलचित्रमा दिलीप रायमाझीसँगै वरिष्ठ कलाकारहरू सुरविर पण्डित, रामचन्द्र अधिकारी, शुशिल पोखरेल, उमेर राई 'फुलन्देको आमा', भगेरी डन, नवज्योती रसाइली, सुमन खाँण, अजय न्यौपाने, सरोज केसी, उमेश मायालु, विवेश पुरी लगायतका कलाकारहरुको अभिनय देख्न सकिने निर्माण टिमले जनाएको छ ।

यस चलचित्रमा अभिनेत्री प्रियंका कार्कीको समेत विशेष भुमिका रहेको बुझिएको छ । तर, उनको के कस्तो भुमिका छ भन्ने कुरा स्पष्ट खुलाइएको छैन ।

चलचित्रको नृत्य निर्देशन कविराज गहतराजले गरेका हुन् ।द्वन्द्व निर्देशन शंकर महर्जनले गरेका छन् भने संगीत संयोजन नरेन्द्र बियोगी र विपिन आचार्यले गरेका छन् । चलचित्रका गीतहरूमा प्रताप दास, मेलिना राई, राजु परियार, किरण सुनार र अनिक गिरीको आवाज रहेको छ ।

निर्देशक विश्वकर्माले यसअघि 'नेपाली वीर, सम्झिराख है, रेलिमाई' लगायतका फिल्महरू निर्देशन गरिसकेका छन्, उनका फिल्महरूले नेपाली मौलिक कथावस्तु, समाजका वास्तविकता प्रस्तुत गर्ने गरेका छन् । फस्टलुक पोस्टर र प्रदर्शन मिति एकैसाथ सार्वजनिक गरेर प्रचार थालेको फिल्मको टिजर र गीत छिट्टै सार्वजनिक गर्ने निर्माण टिमको तयारी छ ।

# नेपाली चलचित्र क्षेत्रका लागि २०८१ साल सुखद

काठमाडौं- नेपाली चलचित्र क्षेत्रका लागि वर्ष, २०८१ सुखद रह्यो । गत वर्ष प्रदर्शनमा आएको चलचित्र पूर्णबहादुरको सारङ्गीले इतिहास रच्न सफल भयो ।

सञ्चार तथा सूचना प्रविधि मन्त्रालयअन्तर्गतको 'सेन्ट्रल म्यानेज्मेन्ट टिकट सिस्टम' (बक्स अफिस)मा यस चलचित्रले ४६ करोड ८० लाख रुपैयाँ (ग्रस) कारोबार गरेको तथ्याङ्क छ । जसले विसं २०८१ मा मात्रै नभई नेपाली चलचित्रको इतिहासमै 'रेकर्ड' दर्ज गरेको देखिन्छ ।

यसकारण पनि चलचित्र क्षेत्रमा नयाँ सम्भावना देखिएको अभिनेता हरिवंश आचार्यको बुझाइ छ । नेपाली चलचित्रको बजारको आकार र अवसरलाई गएको वर्षले प्रस्ट्याएको अभिनेता आचार्यले बताए ।

उनले भने, 'यो वर्ष हामीले आशावादी हुने धेरै ठाउँ छन्, किनकि हामीले हाम्रो दर्शक र बजारको क्षमता बारे बुझ्ने मौका पाएका छौँ । तर, सङ्ख्यात्मक नभई हामीले गुणात्मक चलचित्र बढाउनुपर्छ । अघिल्लो वर्ष केही चलचित्रले गरेको व्यापारका कारण यो वर्ष प्रदर्शनको सङ्ख्या बढ्ने देखिन्छ तर हामीले बजारलाई बुझेर त्योअनुसार चलचित्र ल्याउनु पर्छ ।'

'चलचित्र निर्माण गर्दा आफूमा धेरै दायित्व आउँछ, सोही कारण अहिले अभिनयमै केन्द्रित छौँ । दुई चलचित्र प्रदर्शन भएपछि आगामी के गर्ने भन्ने सोच बन्छ, अहिले भने ती दुई चलचित्रकै काममा केन्द्रित छु', अभिनेता आचार्यले भने ।

अभिनेता निखिल उप्रेती पनि केही वर्षको विश्रामपश्चात् यो वर्षदेखि आफ्नो चलचित्रकर्मलाई निरन्तरता दिँदै छन् । उनले छायाङ्कनका लागि नेपालसँगै भारतको केही भूभागको अवलोकन पनि गरिसकेका छन् ।

'म जेठदेखि चलचित्रको छायाङ्कन गर्ने तयारी गरिरहेको छु, अन्तिम साताबाट काम सुरू हुन्छ । अहिले नेपाली चलचित्रको राम्रो समय आएको छ, चलचित्र भवनसम्म आएका दर्शकलाई बढाउने र ल्याइरहने गरी हामी चलचित्रकर्मीले काम गर्न जरुरी छ । म यसपटक भिन्न कथा र शैलीको चलचित्र दर्शकलाई दिने तयारी गरिरहेको छु', उनले भने । अभिनेता उप्रेतीले द्वन्द्वप्रधान चलचित्रमा वैचारिक द्वन्द्वलाई प्रस्तुत गर्ने बताए ।

झन्डै आठ वर्षपछि निर्देशक तुलसी घिमिरे पनि निर्देशनमा फर्किएका छन् । उनले 'पहाड' नामक चलचित्रको छायाङ्कन गरिरहेका छन् । उनले आज नयाँ वर्षको सन्दर्भ पारेर चलचित्रको प्रदर्शन कात्तिक ७ मा हुने घोषणा गरेका छन् । निर्देशक घिमिरेले दर्शकको विश्वास चलचित्र र चलचित्रकर्मीप्रति बढेको महसुस गरेका छन् । सोही कारण उहाँ यो वर्ष चलचित्रकर्ममा फर्किए ।

'केही समय मैले बनिरहेका चलचित्रको अध्ययन नै गरेँ । हामीले विश्वका अन्य चलचित्रमा नभएका विषय र भावनात्मक कथालाई प्रस्तुत गर्न सक्नुपर्छ । चलचित्र हेर्ने संस्कृतिलाई बढाउन स-परिवार चलचित्र भवनमा आउने किसिमका चलचित्र निर्माण हुनुपर्छ । यो वर्ष नेपाली चलचित्रका लागि अघिल्लो वर्षभन्दा पनि उपलब्धिमूलक हुने विश्वास लिएको छु', निर्देशक घिमिरेले भने ।

कलाकार अभिनेता मदनकृष्ण श्रेष्ठ, सुनिल थापासँगै विपिन कार्की र अरुण क्षेत्रीजस्ता नयाँ पुस्तासँग चलचित्रमा काम गरेका निर्देशक घिमिरेले कान्छी छोरी पञ्चमी घिमिरेलाई अभिनेत्री र जेठी छोरी भावना घिमिरेलाई प्राविधिक टिममा 'प्रोडक्सन डिजाइनर' को जिम्मेवारी दिएका छन् ।

'अन्य पेसाकर्मीझैं हामीलाई पनि सन्तानले हामीले गरिरहेको पेसा रोज्दा खुसी लाग्छ । मेरो दुवै छोरीले गरेको कामको मूल्याङ्कन मैले गर्दा अस्वाभाविक लाग्ला तर यो चलचित्रकर्म ठीक भन्ने लाग्नु सुखद पक्ष हो । उनीहरु चलचित्रकर्ममा आउनुले चलचित्रप्रति उक्त पुस्ताको सकारात्मक सोचलाई दर्शाएको छ', निर्देशक घिमिरेले भने ।

अभिनेत्री केकी अधिकारी वर्ष २०८२ मा प्रदर्शन हुने चलचित्रमा विविधता देख्न पाइनेमा आशावादी छन्। अघिल्लो वर्ष घोषणा र छायाङ्कन गरिएका चलचित्र हेर्दा यो वर्ष नयाँपन र मौलिकतासँगै भव्यता पनि चलचित्रमा पाइने अभिनेत्री अधिकारीले बताइन् ।

'अघिल्लो वर्ष चलचित्रको विषयलाई दर्शकले हिरो बनाए । यो हाम्रो लागि सुखद खबर थियो । त्यसकारण पनि यो वर्ष चलचित्रमा कलाकारसँगै विषयमा निर्माताले लगानी गरेका छन् । म एउटा चलचित्रकर्मीका हिसाबले जति उत्साहित छु, दर्शकमा पनि त्यही उत्साह छ भन्ने विश्वास छ', अभिनेत्री अधिकारीले भनिन् ।

गत वर्ष २०८१ को पहिलो चलचित्रका रूपमा उनले निर्माण गरेको 'बोक्सीको घर' प्रदर्शन भएको थियो । चलचित्रमा समावेश गीत 'बुझिन मैले, बुझाइ देऊ कसैले' सफल हुँदा त्यसको प्रभाव चलचित्रमा पर्‍यो । उक्त चलचित्रलाई प्रदर्शन अगाडि सामान्य रूपमा हेरिएको थियो । तर, यसले अकल्पनीय व्यापार गर्‍यो ।

'बकस अपिस'को तथ्याङ्कअनुसार यस चलचित्रको घरेलु बजारमा १० करोड दुई लाख रुपैयाँको व्यापार भएको छ । यो चलचित्र सफलताको श्रेय विषयवस्तुलाई जान्छ । त्यसकारण गत वर्ष कलाकारको 'स्टारडम' भन्दा 'कन्टेन्ट' चलेको वर्षका रूपमा हेर्न सकिन्छ । अभिनेत्री अधिकारी पनि यस वर्ष आफ्नो निर्माण रहने चलचित्रको छायाङ्कन गर्ने र आउँदो वर्ष प्रदर्शन गर्ने तयारीमा छन् ।

समग्रमा यस वर्षलाई चलचित्रकर्मीले ठूलो आशाका साथ स्वागत गरेका छन् । वर्षकै पहिलो दिन सात चलचित्र प्रदर्शन तथा निर्माण घोषणा गरिएको छ । यो वर्ष कलात्मकसँगै व्यावसायिक चलचित्र उल्लेख्यरुपमा दर्शकले हेर्न पाउने छन् ।

यी हुन् २०८१ न्यून व्यापार गर्ने चलचित्र

गत वर्ष चलचित्र 'पूर्णबहादुरको सारङ्गी'ले इतिहास रच्दा केही चलचित्रले भने सामान्य व्यापार पनि गर्न सकेनन् । सञ्चार तथा सूचना प्रविधि मन्त्रालयअन्तर्गतको 'सेन्ट्रल म्यानेज्मेन्ट टिकट सिस्टम'(बक्स अफिस)' मा रहेको तथ्याङ्कअनुसार वर्ष २०८१ मा ६२ नेपाली चलचित्र प्रदर्शन भए ।

गत साउन १८ गते प्रदर्शन भएको चलचित्र 'शीरफूल' ले ८९ वटा टिकट बिक्रीबापत १८ हजार ५०० रुपैयाँको मात्र कारोबार गरेको छ ।

यस्तै, फागुन ११ गते प्रदर्शन भएको चलचित्र 'ख्या वोला'ले ९२ टिकटबिक्री गरेबापत २७ हजार ६००रुपैयाँ, सोही मितिमा प्रदर्शन भएको चलचित्र 'गाले वाना' को ७२ टिकट बिक्रीबापत २१ हजार ६०० रुपैयाँ, मात्रै कमाएको छ । साथै माघ ४ गते प्रदर्शन भएको चलचित्र 'एक्टर' को १२१ टिकट बिक्री भएबापत ३३ हजार २८५ रुपैयाँ र असोज ११ गते प्रदर्शन भएको 'आँखा' ले २६२ टिकट बिक्री भएबापत ९२ हजार ५२५ रुपैयाँको व्यापार (ग्रस) गरेको छ ।

उक्त व्यापारमा मूल्य अभिवृद्धि करबापत १३ प्रतिशत र मनोरञ्जन करबापत पाँच प्रतिशत तिरिएको रकम कट्टा गरेर चलचित्र भवन र निर्माताले आधाआधा रकम पाउने गर्छन् । उक्त रकममा वितरकले पाउने तय गरिएको रकम प्राप्त गरेपछि मात्र निर्माताले आफ्नो हिस्सा पाउने गर्छन् । तसर्थ उल्लेखित चलचित्रले गरेको व्यापारबाट निर्माताले पाउने रकम निकै न्यून हुन्छ ।

नवप्रवेशी निर्माताले बढी सँगसँगै न्यून व्यापार भएका चलचित्रको विवरणलाई पनि हेर्नुपर्ने पुर्नेन्दु झाले बताए । उनले भने, 'र्माता बढी व्यापार भएको चलचित्र हेरेर हौसिने गरेको पाइन्छ, तर चलचित्र निर्माणभन्दा अगाडि न्यून व्यापार पनि हेर्नुपर्छ ।











प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ३४ | ने.सं. ११४५ चौलागा दशमी | बैशाख १० गते बुधबार, २०८२ | 23 April 2025, Wednesday | पृष्ठ ८ | मूल्य रु १०/–

# वर्तमान शासन प्रणाली प्रति बढ्दो जनआक्रोश र राजनीतिक दलको शासकीय क्षमता !



काठमाडौं । जनतामा असन्तुष्टि बढेको छ । सत्तामा ठूला दलको रुपमा स्थापित भएका नेपाली कांग्रेस र नेकपा एमालेको दुई तिहाइ मत भएको संयुक्त सरकार छ । तर आम जनसमुदायमा उत्साह थपिन सकेको छैन । आम जनताको न्यूनतम् आधारभूत आवश्यकता भनेको गाँस, बास कपास हो भने व्यावसायिक वातावरणको अनुकूलता, प्रविधिको उपयोग र उत्पादनमा कार्यकूशलता, उत्पादित वस्तु तथा सेवाको आकर्षण र मागको बढोत्तरी, शासकीय प्रबन्धको असल अभ्यासजस्ता मुख्य विषयले समुन्नत जीवनको आधार तय गर्दछ । देशमा सानो र छरितो तथा जवाफदेही र जिम्मेवार सरकारको आधारमा शासनको प्रभावकारिता हेरिएको हुन्छ ।

बर्तमान समयमा दलले जनभावना अनुरुप कार्य गर्न सकेको छैन । राज्यसत्ताको सेवा सुविधा उपभोगमा विचौलिया र जनताबाट तिरस्कृत व्यक्तिहरुकै हालीमुहाली हुने गरेको छ । साथै हालै मात्र आम जनमानसमा राम्रो छवि बनाएका प्रशासकिय व्यक्तित्वलाई केही महिना पदावधि बाँकी रहँदै गर्दा पनि अपमानजनक रुपमा पदबाट हटाएकोमा आम जनमानसमा आक्रोस त थियो नै त्यस्तै सुशासन र आर्थिक समृद्धिको नारा दिएर बनेको दुई दलीय गठजोडको सरकारले हिउँदे अधिवेशन छलेर नै अध्यादेश मार्फत सरकार चलाउन खोजेको सन्दर्भमासमेत बर्तमान सरकार प्रति आम जनसमुदायको असन्तुष्टी रहेको छ । आम भावना र आत्मसमीक्षा नगर्दा जनआक्रोश बढ्न गई शासकीय नेतृत्व र जनताबीच टकरावपूर्ण वातावरण देशमा देखा परेको छ । यही देशको वस्तुस्थितिको फाइदा उठाउन विगतमा आम जनताबाट तिरस्कृत भइसकेको तानाशाही शासन व्यवस्था राजतन्त्रले पुन फन उठाउन खोजेको छ । हिजोको राजतन्त्र बर्तमानको गणतन्त्र भन्दा उत्कृष्ट रहेको भ्रम सिर्जना गर्ने कार्यमा समाजका केही प्रबुद्ध व्यक्तिहरुलाई परिचालन गरेर राजतन्त्रको पक्षमा जनमत तयार पार्ने प्रयास शुरु भएको छ । जुन बर्तमान लोकतान्त्रिक गणतन्त्रात्मक संविधान विरुद्ध हो । तर राज्यसत्तामा पुगेका ठूला दलहरु भने निरीह बनेको बनेको अवस्था छ । त्यस्तै अहिले तिनै राजनीतिक दलका भातृ संगठनका रुपमा रहेको दलका विभिन्न संगठनहरुबाट शैक्षिक सत्र शुरुआतमै आन्दोलन गरिरहेको छ । यसले गर्दा नीजि विद्यालयलाई फाइदा पुगेको छ भने सामुदायिक विद्यालय जहाँ नीजि विद्यालयमा पढाउन नसक्ने न्युन आय भएका आम समुदायका छोराछोरीहरु शिक्षा पाउने अधिकारबाट बिमुख हुन पर्ने अवस्था सिर्जना हुँदा पनि राज्य पक्ष निरीह बन्नु देशकै लागि दुर्भाग्य हो । यसबाट पनि आम जनमानसमा लोकतन्त्र, गणतन्त्र प्रति वितृष्णा जगाउने कार्यमा दलहरु नै जिम्मेवार रहेको राजनीतिक विश्लेषकहरुको बुझाई रहेको छ । यसबाट पनि विगतको शासन व्यवस्था उत्कृष्ट रहेको भ्रम सिर्जना गराउन ठूलो बल पुऱ्याएको छ ।

नेपालमा राजनीतिक अवधारणासहितको परिवर्तन वि.सं. २००७ देखि भएको हो । वि.सं. २०१५ मा पहिलोपटक नेपालीले जनप्रतिनिधि छान्ने र बहुमतीय विधिबाट सरकार गठन भयो । राजनीतिक संक्रमणको पहिलेको अवस्था एवं जननिर्वाचित प्रणालीको पहिलो अभ्यासका कारण शासन सञ्चालनका कमजोर पक्षको आवरण र अन्तर्राष्ट्रिय परि स्थितिबाट जननिर्वाचित सरकार अपदस्त भयो । ४० वर्ष लामो पञ्चायती व्यवस्थामा राजाको शासकीय नेतृत्वमा शासन सञ्चालन भए ।

जनआक्रोश र अन्तर्राष्ट्रिय

**बाँकी पेज ७ मा**

# नवौं भक्तपुर औद्योगिक साँस्कृतिक पर्यटन तथा व्यापार महोत्सव सम्पन्न



भक्तपुर । गत २०८१ चैत २८ गतेबाट सुरु भएको नवौं भक्तपुर औद्योगिक साँस्कृतिक पर्यटन तथा व्यापार महोत्सव बैशाख ७ गते सम्पन्न भएको छ । समापन समारोहमा सूर्यविनायक नगरपालिकाका प्रमुख बासुदेव थापाले महोत्सवले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय रुपमा उत्कृष्ट योगदान गरेको बताउँदै उपभोक्तालाई सहुलियत दिएको र स्थानीय उत्पादनको

**बाँकी पेज ७ मा**

# जमिन बाँझो राख्नेलाई कारबाहीको माग




काठमाडौं । देशभर कुल खेतीयोग्य जमिनको एक तिहाई अर्थात् तीन भागमा एक भाग जमिन बाँझो रहेको बताइएको छ । नेपालमा खेतीयोग्य जमिनमध्ये करिब १० लाख ३० हजार हेक्टर क्षेत्रफल बाँझो छ । सरकारी तथ्यांक अनुसार नेपालको कुल खेतीयोग्य जग्गा ४१ लाख २१ हजार हेक्टर छ । हाल ३० लाख ९१ हजार हेक्टर क्षेत्रफलमा मात्रै खेती गरिन्छ ।

कृषिमा रुपान्तरण सम्भाबना र चुनौती विषयमा शुक्रबार राजधानीमा भएको अतरसंवाद कार्यक्रममा बरिष्ठ वैज्ञानिक डा.कृष्णप्रसाद तिमल्सिनाले तथ्यांक प्रस्तुत गर्दै यही कारणले पनि नेपाल खाद्यान्नमा परनिर्भर रहन बाध्य भएको बताएका छन् । विपी चिन्तन प्रतिष्ठानले गरेको कार्यक्रममा उनले यही कारण धान मात्रै पनि बार्षिक ४० देखि ५० अर्बको विदेशबाट आयात गर्नुपर्ने स्थिति रहेको

**बाँकी पेज ७ मा**

# नेवाः राष्ट्रिय मुक्ति मोर्चा, नेपाःको तेश्रो राष्ट्रिय सम्मेलनबाट नयाँ नेतृत्व चयन



काठमाडौं । नेकपा माओवादी निकट जातिय संगठन नेवाः राष्ट्रिय मुक्ति मोर्चा, नेपाःको तेश्रो राष्ट्रिय सम्मेलन काठमाडौमा सम्पन्न भएको छ । नेकपा माओवादी केन्द्रका अध्यक्ष तथा पूर्व प्रधानमन्त्री पुष्पकमल दाहाल प्रचण्डले उद्घाटन गरेको सम्मेलनबाट उमेश स्थापितको नेतृत्वमा १२७ सदस्यीय केन्द्रीय समिति निर्वाचित गरेको छ । राजधानीमा दुईदिने सम्मेलनपछि सर्वसम्मतबाट उनको नेतृत्वमा नयाँ समिति गठन भएको हो । निर्वाचित केन्द्रीय समितिको पहिलो बैठकले उपाध्यक्षसहित कोषाध्यक्षको जिम्मेवारी र कार्यविभाजन तय गर्नेछ । नेवाः पहिचानसहितको स्वायत्त राज्य स्थापनाको लागि अग्रगमणको बाटोमा लाग्ने उद्देश्यसहित गठन भएको यस मोर्चाको नेवाः राजनीतिक आन्दोलनमा छुट्टै पहिचान स्थापित भएको सम्मेलनमा नेवाः खलःको संस्थापक र निवर्तमान अध्यक्ष दिलिप महर्जनले जानकारी दिए । आइतबार भएको बन्द सत्रमा नेकपा (माओवादी केन्द्र)का वरिष्ठ उपाध्यक्ष नारायणकाजी श्रेष्ठले नेवाः समुदायलाई अधिकार सम्पन्न गराउने कुनै संस्था छ, भने त्यो नेवाः मोर्चा र माओवादी रहेको स्पष्ट पारे । नेपाल सम्वत र नेपालभाषालाई सरकारी मान्यताको लागि लामो समयसम्म नेवाः समुदायले आन्दोलन गरे पनि प्रमुख राजनीतिक पार्टीहरुले बेवास्ता गरे पनि माओवादीको नेतृत्वमा संघीय र प्रादेशिक सरकार गठन भएपछि सो अधिकार प्रत्याभूत गरेको उनले स्मरण गराए । पूर्वउपप्रधानमन्त्री समेत रहेका नेता श्रेष्ठले राजधानीका स्थानीय बासिन्दा भए पनि राजनीतिक रुपमा पछाडि पार्नुको कारण खोतल्दै संघीय लोकतान्त्रिक गणतन्त्र, धर्मनिरपेक्षता, समावेशी र समानुपातिकतासहित विशेष रुपमा आदिवासी जनजाति र नेवाः समुदायको लागि स्वायत्त राज्य आवश्यक भएको दाबी गरे । उनले आत्म निर्णयको

**बाँकी पेज ७ मा**

# उपभोक्ता ठग्दै ठूलादेखि साना व्यापारी, अनुगमन निकाय मौन !

*अनुसा थापा*

काठमाडौं उपत्यकाभित्र र बाहिरी जिल्लाका व्यापारीहरुले महाबौद्ध, न्यूरोड, असनमा भएका पसलबाट रेडिमेट कपडा लगेर बेच्छन् । जुत्ता, बेल्ट, ब्यागहरु पनि त्यतैबाट लग्ने गरिएको छ । ठूल्ठूला व्यापारीहरुले छिमेकी मुलुक चीन र भारतबाट सामान मगाउँछन् । भन्सार छरेर सामान ल्याइन्छ भन्ने त सबैलाई थाहा नै छ ।

उनीहरुले होलसेल व्यापारीलाई एक सयको सामान तीन सयमा बेच्छन् । ससाना व्यापारीहरुले होलसेल व्यापारीबाट पाँच सयमा लगेको सामान १५ सयमा बेचिरहेका छन् । होलसेल होस् या खुद्रा व्यापारी, कसैले भ्याट बिल दिँदैन् । खोइ त राज्य ? राजश्व छलेर व्यक्ति मोटाउने काम भइरहेको छ ।

सर्वसाधारणले एक सयको सामान १४ सय बढी मूल्य हालेर खरिद गर्नुपर्ने बाध्यता छ । खुलेआम रुपमा यस्तो गैरकानुनी धन्दा भइरहँदा राज्य निदाएको छ । कपडामा मात्र होइन्, खाद्यान्न र तरकारीमा पनि त्यस्तै छ । अन्य मुलुकबाट आयात गर्ने व्यापारीले राजश्व छलेर वा न्यून राजश्व तिरेर सामान ल्याउँछन् ।

गोदाममा थन्काउँछन् । दुई गुणा नाफा खाएर होलसेल व्यापारीलाई बेच्छन् । होलसेल व्यापारीले त्यसमा पाँचौं गुणा थपेर खुद्रा पसललाई बेच्छन् । उपभोक्ताको हातसम्म पुग्दा सो सामानको मूल्य धेरै बढिसकेको हुन्छ । अहिले त ठग्नका लागि सबैभन्दा सजिलो सामान बनेको छ, व्यापार ।

हामीले देख्दा मँहगिएको मात्र देख्छौं । तर, सामान मँहगिएको होइन्, धेरैले आफ्नो हिस्सा छुट्याउँदा बढेको हो । किसानहरु बन्दा दुई रुपैयाँ किलोमा बिकी नभएको बताउँछन् । तर, बजारमा सोही बन्दाको मूल्य किलोको ५० रुपैयाँ माथि छ । अनि मूल्यवृद्धि गर्नुमा बिचौलियाको हात भएको प्रष्ट छ ।

अर्कोतर्फ, बाटोमा गलैंचा बोक्दै हिँडेकाहरु यत्तिकै भेटिन्छ । उनीहरुले बोकेको एउटै गलैंचा हजारौं मूल्यको हुन्छ । तर, महाबौद्ध, असन, ढल्कुतिर गएर बुझ्ने हो भने त्यो गलैंचा पाँच सयदेखि हजार रुपैयाँमा पाइन्छ । उनीहरुले कति नाफा खाइरहेका छन् ? त्यसपछि आफैंलाई थाहा हुन्छ ।

व्यापारीहरु राजश्व छल्छन् । अधिकांश पसल दर्ता नै नगरिकन सञ्चालन भइरहेको छ । तर, राज्य

**बाँकी पेज ७ मा**

# नेक अल्मुनाई मिटः दक्ष जनशक्ति उत्पादनमा कलेजले पुर्याएको योगदानको प्रशंसा




भक्तपुर । नेपाल इन्जिनियरिङ कलेजले देशको लागि चाहिने दक्ष जनशक्ति उत्पादनमा महत्वपूर्ण योगदान दिएको भन्दै पूर्वविद्यार्थीहरुले प्रशंसा गरेका छन् । कलेजको शैक्षिक गुणस्तर अभिवृद्धि गर्दै विद्यार्थीहरुको आकर्षण बढाउन र कलेजको वृहत्तर हितमा काम गर्न कलेजका पूर्वविद्यार्थीहरु एकजुट पनि भएका हुन् । मुनाफारहित सामाजिक शैक्षिक संस्थाका रुपमा स्थापित कलेजले स्वदेशमै अन्तराष्ट्रिय स्तरको इन्जिनियरिङ शिक्षा दिएर आफुहरूलाई सफल बनाउन महत्वपूर्ण योगदान दिएको भन्दै पूर्वविद्यार्थीहरूले कलेजका शिक्षक शिक्षिकाहरूलाई पनि सम्झिए ।

शनिबार कलेजमा आयोजित 'नेक अल्मुनाई मिट' मा सहभागी हुँदै पूर्वविद्यार्थीहरुले आफ्नो कलेज जीवनलाई पनि सम्झिए । हाल सरकारी, गैरसरकारी देखि आफ्नै कम्पनी र फर्महरु सञ्चालन गरेर व्यवसायिक क्षेत्रमा स्थापित भएका उनीहरुले तत्कालिन अवस्थामा निजी क्षेत्रबाट मुनाफारहित सामाजिक शैक्षिक संस्थाका रुपमा नेपाल इन्जिनियरिङ कलेजको स्थापना नभएको भए आफुहरु इन्जिनियर नै बन्न नसक्ने अवस्थाको चर्चा गरे ।

कलेजका प्रथम अल्मुनाईका महासचिव इन्जिनियर दिपक बाबु कंडेलले तत्कालिन समयमा पुल्चोक पछि अन्य इन्जिनियरिङ कलेज नहुँदा धेरै विद्यार्थीहरुको इन्जिनियर बन्ने सपना पुरा नभइरहेको अवस्थामा स्वर्गीय प्रा.डा. दीपक भट्टराई लगायतको अगुवाईमा नेपाल इन्जिनियरिङ कलेजको स्थापना भएको बताउनु भयो । नेपालको विकासमा चाहिने दक्ष प्राविधिक जनशक्ति उत्पादनमा नेपाल इन्जिनियरिङ कलेजले महत्वपूर्ण भूमिका निर्वाह गरेको चर्चा गर्दै कँडेलले कलेजले स्थापनाकालदेखि नै गुणस्तरीय शिक्षामा जोड दिएको कारणले नै कलेजमा विद्यार्थीको आकर्षण रहेको बताउनु भयो । 'यो कलेजले दशौं हजार इन्जिनियर उत्पादन गरिसकेको छ । सुरुवात देखि नै क्वालिटी एजुकेशनमा ध्यान दिएकोले नै कलेज आजसम्म विद्यार्थीको रोजाईमा परेको हो । यसलाई अझ गुणस्तरीय र विश्वस्तरीय बनाउँदै लैजान हामी सबैले भूमिका खेलौं ।' पूर्व विद्यार्थी कँडेलले भन्नुभयो ।

यस्तै कार्यक्रममा बोल्दै दोश्रो अल्मुनाई समितिका महासचिव इ. विनोद देवकोटाले निजी क्षेत्रले गुणस्तरीय शिक्षा प्रदान गरेकै कारण नेपालले उच्च शिक्षामा फड्को मारेको चर्चा गर्दै इन्जिनियरिङ शिक्षाको विकास, दक्ष जनशक्ति उत्पादनमा कलेजले ठूलो योगदान दिएको बताउनु भयो । कलेज मन्दिर जस्तै रहेको बताउँदै उनले कलेजमा कुनै राजनीति नगरी यसको शैक्षिक गुणस्तर अभिबृद्धि गर्न, कलेजलाई स्थायित्व दिनका लागि सबै एक भएर लाग्नु पर्ने बताउनु भयो ।

अर्का अल्मुनाई इ. पदमकुमार मैनालीले १९९६ ताका नेपाल इन्जिनियरिङ कलेज नभएको भए आफ्नो व्याचका धेरैले पढ्न नपाउने अवस्था रहेको भन्दै विगत सम्झनु भयो । हाल शहरी विकास मन्त्रालयका सहसचिव समेत रहनुभएका मैनालीले कलेजको शैक्षिक, भौतिक सुधार गर्न र कलेज प्रति विद्यार्थीको आकर्षण बढाउन सहयोग गर्ने प्रतिबद्धता जनाउनु भयो । कलेजले स्थापना देखि आजसम्म गुणस्तरीय शिक्षा प्रदान गर्नु गौरबको कुरा भएको उहाँको धारणा छ ।

कार्यक्रममा बोल्दै नेपाल सरकार शिक्षा मन्त्रालयद्वारा गठित कलेज सञ्चालक समितिका अध्यक्ष समेत रहनु भएका चाँगुनारायण नगरपालिकाका मेयर जीवन खत्रीले नेपाल इन्जिनियरिङ कलेजको शैक्षिक, प्रशासनिक र भौतिक सुधारका लागि आफु लागि रहेको भन्दै नेक अल्मुनाईहरुलाई पनि आवश्यक सल्लाह, सुझाव र सहकार्यको आव्हान गर्नुभयो । कलेजको स्थायित्व र शैक्षिक विकासका लागि शिक्षक, कर्मचारी, विद्यार्थी र पूर्व विद्यार्थीहरुको योगदान हुनुपर्ने भन्दै उहाँले नेपाल इन्जिनियरिङ कलेजलाई सामाजिक शैक्षिक संस्थाकै रुपमा सञ्चालन गर्न आफुहरु प्रतिबद्ध रहेको बताउनु भयो । कलेजको विषयमा सर्वोच्च अदालतमा विचाराधिन मुद्दा चाँडै टुंगोमा पुगे यसलाई देशकै नमूना कलेजका रुपमा सञ्चालन गर्न नगरपालिका तयार रहेको पनि उहाँले जिकीर गर्नुभयो । 'कलेज सञ्चालन गर्न नगरपालिकाले कलेज सञ्चालन ऐन पास गरिसकेको अवस्था छ । भोली अदालतका मुद्दा टुंगो लागेर नगरपालिकालाई यो कलेज चलाउनु पर्ने अवस्था आए हामी पछि हट्दैनौं कलेज चलाएरै छाड्छौं ।' अध्यक्ष खत्रीले भन्नुभयो । नेक अल्मुनाई मिट कार्यक्रममा कलेजका प्राचार्य दुर्गाप्रसाद भण्डारीले कानुनी तथा प्रशासनिक उल्झनहरुको सामना गर्नु परेपनि कलेजको शैक्षिक गुणस्तर खस्कन नदिएको बताउनु भयो । कलेजको भौतिक, शैक्षिक गुणस्तर मापन गरेर नै नेपाल इन्जिनियरिङ परिषद्ले स्थायी प्रमाण पत्र दिएको चर्चा गर्दै उहाँले आउँदा दिनहरुमा अल्मुनाईहरुले कलेजको श्रीबृद्धिमा टेवा दिने अपेक्षा गर्नुभयो । साथै, उहाँले कलेजको शैक्षिक, भौतिक र प्रशासनिक गुणस्तर सुधार गर्न कलेज सञ्चालक समितिले योजनाबद्ध काम गरिरहेको बताउनु भयो ।

'नेक अल्मुनाई मिट' मा कलेजका स्थापना देखि सन् २०१९ सम्मका करिब ५ सय विद्यार्थीहरुको उपस्थिति रहेको थियो । सन् १९९४ मा मुनाफारहित सामाजिक शैक्षिक संस्थाका रुपमा नेपाल इन्जिनियरिङ कलेजको स्थापना भएको थियो । इन्जिनियरिङ विधाका स्नातक तथा स्नातकोत्तर तहसम्मको अध्ययन अध्यापन हुने यस कलेजबाट हालसम्म दश हजार भन्दा बढी दक्ष जनशक्ति उत्पादन भइसकेको कलेजका सहायक प्राचार्य मोहनध्वज केसीले बताउनु भयो ।

पछिल्लो समय कक्षा १२ पास गर्ने वित्तिकै नेपाली विद्यार्थीहरु विदेशिईरहेको अवस्थामा उनीहरुलाई स्वदेशमै उच्च शिक्षा हासिल गर्नका लागि प्रेरित गर्न तथा नेपालको इन्जिनियरिङ शिक्षा अन्तराष्ट्रिय स्तरको रहेको छ भनेर बुझाउन नेक अल्मुनाई मिट गरिएको बताउनु भयो ।

नेक अल्मुनाई मिटका संयोजक आर्किटेक्चर पोषण थापाको अध्यक्षतामा सम्पन्न कार्यक्रममा पूर्व अल्मुनाईहरू काठमाडौं महानगरपालिका शहरी योजना आयोगका उपाध्यक्ष डाक्टर इन्जिनियर सुमन नरसिंह राजभण्डारी, सदस्य इ. बाबुराम भट्टराई, कलेजका संस्थापक सदस्य इ. सलिल भट्टराई लगायतको सहभागीता रहेको थियो ।

# प्रेस चौतारीले कारबाही गरेका दुई पत्रकार सञ्चारिकामा निर्वाचित

काठमाडौं । नेकपा एमाले निकट प्रेस चौतारीले कारबाही गरेका दुईजना सदस्य सञ्चारिका समूहको निर्वाचनमा निर्वाचित भएका छन् । सङ्गठनको निर्णय विरुद्ध उम्मेदवारी दिएको भन्दै चौतारीबाट निलम्बनमा परेका चारजनामध्ये दुईजना महिला केन्द्रीय सदस्य पदमा निर्वाचित भएका हुन् ।

चौतारीले पूर्व केन्द्रीय सचिव लोग्शरी कुँवरसहित पूर्व केन्द्रीय सदस्य पवित्रा सुनार केन्द्रीय सदस्य तारा चापागाईं र निर्वाचन आयोगकी सदस्य दीपा रेग्मीलाई सङ्गठनको साधारण सदस्यसमेत नरहने गरी कारबाही गरेर विज्ञप्ति निकालेको थियो । कारबाहीमा परेकामध्ये चापागाईं र रेग्मी निर्वाचित भएका हुन् ।

यता, चौतारीकी पूर्व सचिव कुँवरले १०० मत प्राप्त गरेकी छन् भने अध्यक्षको उम्मेदवार सुनुवारले ८७ मत प्राप्त गरेकी छिन् ।

महिला पत्रकारहरूको सङ्गठन सञ्चारिका समूहको निर्वाचन शुक्रबार बेलुका सम्पन्न भएको थियो । अन्य पदाधिकारी र सदस्यमा नेपाल प्रेस युनियन र प्रेस चौतारी निकट पत्रकारहरू विजयी भएका छन् ।

# बुङमतीको रातो मछिन्द्रनाथ मन्दिर पुनर्निर्माण कार्य अन्तिम चरणमा



ललितपुर । २०७२ मा आएको विनाशकारी भूकम्पले क्षति पुर्याएको बुङमतीस्थित ऐतिहासिक रातो मछिन्द्रनाथ मन्दिरको पुनर्निर्माण कार्य अन्तिम चरणमा पुगेको छ। करिब ८ वर्षदेखि पुनर्निर्माणमा रहेको यो मन्दिर हाल पूरै स्वरूपमा देखिन थालेको छ।

शिखर शैलीमा निर्मित यो मन्दिर स्थानीय काठ तथा ढुंगा ईट्टाको प्रयोग गरी परम्परागत प्रविधिबाट निर्माण भइरहेको छ। सांस्कृतिक सम्पदाको संरक्षण र पुनःस्थापनाको दृष्टिले यो मन्दिर महत्वपूर्ण मानिन्छ।

रातो मछिन्द्रनाथलाई वर्षा र समृद्धिका देवता मानिन्छ, र उहाँको रथयात्रा उपत्यकाको सबैभन्दा लामो तथा भव्य जात्रामध्ये एक हो। मन्दिर पुनर्निर्माण सम्पन्न भएपछि बुङमती क्षेत्रको सांस्कृतिक महत्व झनै उजागर हुने विश्वास गरिएको छ।

श्री रातो मछिन्द्रनाथ पुनर्निर्माण उपभोक्ता समितिका अध्यक्ष अमिर शाक्यका अनुसार हाल मन्दिरको अन्तिम रूप दिने कार्य र परिसर व्यवस्थापन जस्ता कार्यहरू तीव्र गतिमा भइरहेका छन्

# शिक्षक आन्दोलन नरोकिए पनि १२ को परीक्षा हुने



काठमाडौं । राष्ट्रिय परीक्षा बोर्डले यही वैशाख ११ गतेदेखि सञ्चालन हुने कक्षा १२ को परीक्षा नरोक्ने निर्णय गरेको छ । आज बिहान बसेको बोर्डको बैठकले १२ को परीक्षा निर्धारित समयमा नै गर्ने निर्णय गरेको हो । निजामती कर्मचारी खटाएर भए पनि परीक्षा सञ्चालन गर्ने निर्णय भएको बोर्डका अध्यक्ष महाश्रम शर्माले जानकारी दिए । कक्षा १२ को वार्षिक परीक्षा यही वैशाख ११ गते बिहीबारदेखि सञ्चालन गर्ने तयारी छ ।

देशैभरिका सामुदायिक विद्यालयका शिक्षकहरु तीन सातादेखि राजधानी केन्द्रीत आन्दोलनमा रहेका कारण परीक्षाप्रति संशय सिर्जना भएको थियो। बोर्डले सबै जिल्लाका परीक्षा समन्वय समितिमार्फत कक्षा १२ को परीक्षा केन्द्र भएका विद्यालयहरूलाई परीक्षा सञ्चालन गर्न अनुरोध गर्ने निर्णय गरेको छ । वैशाख ११ गते बिहीबारदेखि सञ्चालन हुने परीक्षा २४ गते सकिने तालिका बोर्डले सार्वजनिक गरेको छ ।

परीक्षा नियन्त्रक शर्माले परीक्षा सार्दा गलत सन्देश जाने तथा विद्यार्थीको समय खेर जाने भएकाले परीक्षा तोकिएकै समयमा सञ्चालन गरिने जानकारी दिए । 'जिल्ला जिल्लामा सीडीओले कर्मचारी परिचालन गरेर, नेपाल सरकारले जिम्मा लिने गरी तोकिएकै समयमा परीक्षा लिने निर्णय भएको छ,' शर्माले सुनाए, 'कक्षा १२ को परीक्षा पूर्व निर्धारित समयमै हुन्छ । कर्मचारी परिचालन गरेर भए पनि परीक्षा सञ्चालन गर्ने निर्णय भएको छ ।' प्रमुख जिल्ला अधिकारीको संयोजकत्वमा जिल्ला परीक्षा समन्वय समितिलाई सम्पूर्ण जिम्मा दिएर परीक्षा गर्ने निर्णय भएको परीक्षा नियन्त्रक शर्माले बताएका छन् ।

# विद्यार्थीको पढ्न पाउने अधिकार हनन भएको भन्दै ध्यानाकर्षण ।



काठमाडौं, बैशाख ७ गते । अभिभावक संघ नेपाल, केन्द्रीय समितिले जारी शिक्षक आन्दोलनका कारण सामुदायिक विद्यालयका करिब ५५ लाख विद्यार्थीको पढ्न पाउने अधिकार हनन् भएको भन्दै राष्ट्रिय मानव अधिकार आयोगको ध्यानाकर्षण गराएको छ । शिक्षक आन्दोलनका कारण विद्यार्थीहरूको पढ्न पाउने अधिकार हनन भएको भन्दै अभिभावक महसंघका अध्यक्ष सुप्रभात भण्डारी, संघका अध्यक्ष केशव पुरी सहितको टोलीले आईतबार आयोगमा उक्त ध्यानाकर्षण पत्र बुझाएका हुन्।

ध्यानाकर्षण पत्र यस्तो छ ।

उपर्युक्त सम्बन्धमा विद्यालय शिक्षाको शैक्षिकसत्र शुरूभइसकेको अवस्थामा विगत १९ दिन देखि शिक्षकहरूबाट विभिन्न मागहरूराखेर गरिएको आन्दोलनका कारण सामुदायिक विद्यालयका करिब ५५ लाख विद्यार्थीको पठनपाठन, परीक्षा, नतिजा प्रकाशन, विद्यालय भर्ना जस्तो कुरा प्रभावित हुदा विद्यार्थीहरुको पढ्न पाउने अधिकार हनन भएको तर्फ हामी अभिभावकहरूका संस्थाको ध्यानाकर्षण भएको छ । शिक्षाका सरोकारवालाहरूको समस्या राज्यले हल गर्नु जरुरी छ, शिक्षकका जायज मागहरू तत्काल पुरा गर्नुपर्छ भन्ने कुरामा किन्तु परन्तु हुनसक्तन, शिक्षक खुशी भए भने मात्रै कक्षा कोठा रमाउछ तसर्थ शिक्षकलाई सम्मान गर्ने कुरामा राज्य चुक्न हुँदैन साथसाथै विद्यार्थीहरुको पहन सिक्न पाउने नैसर्गिक अधिकारको सबै क्षेत्र बाट सम्मान गरिनुपर्छ भन्ने कुरामा हामी दृढ छौ, यस्तै यावत् विषयका साथ आसन्न कक्षा १२ को परीक्षा समेत प्रभाव हुन सक्ने तर्फ मानव अधिकार आयोगको समेत हामी गंभिर रूपमा ध्यानाकर्षण गराउन चाहन्छौ, विद्यार्थीहरुको पठन पाउने हक बाल अधिकारको रक्षा गर्दै तत्काल आम शिक्षकहरूका समस्याको हल गरेर सामुदायिक विद्यालयहरू सञ्चालनमा आउनसक्ने विद्यार्थीहरुका पठनपाठन हुनसक्ने १२ कक्षाको राष्ट्रिय परीक्षा हुने शान्तिपूर्ण वातावरण मिलाउन आम अभिभावक तथा विद्यार्थीहरुका तर्फबाट जोडदार माग समेत गर्दछौं ।

संरक्षक सुप्रभात भण्डारी
(अध्यक्ष अभिभावक महासंघ)
अध्यक्ष
केशव पुरी
( अभिभावक संघ नेपाल)

# अन्तरिक्षमा जीवनको संकेत फेला पारेका दावी



एलियन जीवन भेटियो: अन्य ग्रहहरूमा जीवन वा एलियनहरू रहेको बारेमा धेरै प्रकारका दावीहरू गरिएका छन् । वैज्ञानिकहरू पनि अन्य ग्रहहरू र अन्तरिक्षमा जीवनको खोजीमा निरन्तर लागी परेका छन् । धेरै अध्ययनहरू भइरहेका छन्, अनुसन्धानहरू भइरहेका छन्, अन्तरिक्षयानहरू अन्तरिक्षमा पठाइँदै छन... ब्रह्माण्डका रहस्यहरू समाधान गर्न हरसम्भव प्रयासहरू भइरहेका छन् ।

हालै वैज्ञानिकहरूले अन्तरिक्षमा जीवनको संकेत फेला पारेका छन् । जेम्स वेब स्पेस टेलिस्कोप (जेडब्लुएसटी) ले के२-१८ द नामक एलियन ग्रहमा त्यस्ता ग्यासहरू पत्ता लगाएको छ जुन बिना जीवनलाई समर्थन गर्न असम्भव छ ।

वैज्ञानिकहरूले यसलाई ठूलो उपलब्धि मान्न थालेका छन् । हाम्रो सौर्यमण्डल बाहिर जीवनको सम्भावनाको यो अहिलेसम्मकै सबैभन्दा ठूलो संकेत मानिन्छ । वास्तवमा, वैज्ञानिकहरूले के२-१८ द ग्रहमा डाइमिथाइल सल्फाइड ( र डाइमिथाइल डाइसल्फाइड नामक दुई ग्यासहरू देखेका छन् । यी ग्याँसहरू पृथ्वीमा मुख्यतया शैवाल जस्ता सूक्ष्मजीवहरूद्वारा उत्पादन गरिन्छन् । यसले यस ग्रहमा सूक्ष्मजीव जीवन हुन सक्ने संकेत गर्छ ।

**वैज्ञानिकको भनाई !**

यद्यपि, क्याम्ब्रिज विश्वविद्यालयका खगोलशास्त्री तथा यस अध्ययनका प्रमुख लेखक निखु मधुसूदनले यो जीवित प्राणीहरूको उपस्थितिको ठोस प्रमाण नभएको स्पष्ट पारेका छन् । यो जीवनको सम्भावित संकेत (जैविक संकेत) हो । उनले भने, 'हामी होसियार हुनुपर्छ ।' अवलोकन गर्नुपर्नेछ ।

**पृथ्वीबाट १२४ प्रकाश वर्ष टाढा**

के२-१८ द ग्रह पृथ्वीभन्दा ८.६ गुणा गह्रौं र व्यासमा २.६ गुणा ठूलो छ । यो आफ्नो ताराको वरिपरि घुम्छ । वैज्ञानिकहरू भन्छन् कि यहाँ तरल पानी हुन सक्छ, जुन जीवनको लागि आवश्यक छ । यो ग्रहले पृथ्वीबाट १२४ प्रकाशवर्ष टाढा रहेको सिंह राशिको रातो बौना ताराको परिक्रमा गर्छ । सरल शब्दमा भन्नुपर्दा, यो पृथ्वीबाट ९.५ ट्रिलियन किलोमिटर टाढा छ । यो ताराको वरिपरि अर्को ग्रह पनि पत्ता लागेको छ ।

के हाइसियन वर्ल्डको दृष्टिकोण साकार हुँदैछ ?

९० को दशकदेखि, लगभग ५,८०० बाह्य ग्रहहरू पत्ता लागेका छन् । वैज्ञानिकहरूले अन्तरिक्षमा 'ह्यासिन वर्ल्ड' नामक ग्रहहरूको परिकल्पना गरेका छन् । हाइसियन संसारमा पानीको महासागर, बाँच्न सक्ने सूक्ष्मजीवहरू र हाइड्रोजनले भरिएको वातावरण हुनेछ । जेम्स वेब टेलिस्कोपले पहिले के२-१८ द को वायुमण्डलमा मिथेन र कार्बन डाइअक्साइड पत्ता लगाएको थियो । ताराको बसोबासयोग्य क्षेत्रमा अवस्थित एक्सोप्लानेटको वायुमण्डलमा कार्बन-आधारित अणुहरू फेला परेको यो पहिलो पटक थियो ।

**यहाँ जीवन सम्भव छ !**

क्याम्ब्रिज विश्वविद्यालयका वैज्ञानिकहरूले भने कि अहिलेसम्मको तथ्याङ्कले स्पष्ट रूपमा देखाउँछ कि के२-१८ द हाइसियन संसार हुन सक्छ । यहाँ जीवन सम्भव छ । तर हामीले अन्य सम्भावनाहरू पनि खुला राख्नुपर्छ । हाइसियन ग्रहहरूमा पृथ्वीमा जस्तै सूक्ष्मजीव जीवन हुन सक्छ, जुन पृथ्वीभन्दा न्यानो महासागरहरूमा फस्टाउँछ । जटिल जीवहरू वा मानव जीवनको बारेमा, उनले भने कि हाम्रो आधारभूत धारणा साधारण सूक्ष्मजीव जीवनको बारेमा हो ।

वेब टेलिस्कोपले ९९.७% विश्वासका साथ यी ग्यासहरूको उपस्थिति पुष्टि गरेको छ, तर यो तथ्याङ्क गलत हुन सक्ने सम्भावना ०.३% छ । यी ग्याँसहरू १० भाग/मिलियन भन्दा बढी सांद्रतामा फेला परेका थिए, जुन पृथ्वीको वायुमण्डल भन्दा हजारौं गुणा बढी हो । क्याम्ब्रिजका वैज्ञानिक मधुसूदनले भने, 'अवस्थित ज्ञानको आधारमा, गैर-जैविक प्रक्रिया मार्फत यसलाई व्याख्या गर्न असम्भव छ ।' अर्का वैज्ञानिकले सतर्क रहन सल्लाह दिए । "के२-१८ द बाट प्राप्त तथ्याङ्क आकर्षक छ, तर हामीले यसलाई राम्ररी परीक्षण गर्न आवश्यक छ," टेक्सासको साउथवेस्ट रिसर्च इन्स्टिच्युटका वैज्ञानिक क्रिस्टोफर ग्लेनले भने ।

# हवेली दरवारको टोलीको आगमन भक्तपुरमा



भक्तपुर । चितवनको भतरपुर महानगरपालिकास्थित लेक ट्वाटी थाउजेन्ड फार्म एण्ड रिसोर्ट (एलटीके) हवेली दरवार चम्पानगरको एक टोली मंगलबार भक्तपुर पुगेको छ । उनीहरु भक्तपुर नगरपालिका वडा नं ९ तौलाछेंस्थित माटैमाटोले बनेको टेराकोटी घरमा पुगेर कदरपत्र दिन भक्तपुर पुगेका हुन् ।

हालसालै भतरपुर महानगरपालिकास्थित लेक ट्वाटी थाउजेन्ड फार्म एण्ड रिसोर्ट (एलटीके) हवेली दरवार चम्पानगरमा नाच प्रदर्शन गर्न आएबापत भक्तपुरको नाच टोलीलाई कदरपत्र दिन टोली भक्तपुर आएको हो । टोलीले मंगलबार भक्तपुर पुगेर विश्वकर्मा भैल प्याखं तौलाछे भक्तपुरका अध्यक्ष विष्णुप्रसाद प्रजापतिलगायतको टोलीलाई कदरपत्र वितरण गरेको हो । त्यस अनुसार टोलीलाई पनि मायाको चिनो प्रदान गरिएको थियो ।

चितवनमा आएर नाच प्रदर्शन गरेबापत भतरपुर महानगरपालिकास्थित लेक ट्वाटी थाउजेन्ड फार्म एण्ड रिसोर्ट (एलटीके) हवेली दरवार चम्पानगरका सञ्चालक देवेन्द्रनाथ लोहनी, उपाध्यक्ष हरिभक्त महर्जनलगायतको टोली चितवनबाट मंगलबार भक्तपुर पुगेको थियो । टोलीमा नाट्यकर्मी महासंघ नेपालका संस्थापक अध्यक्ष विजय विस्फोटलगायतका पनि सहभागी थिए ।

कार्यक्रममा सहभागी टोलीलाई भक्तपुरमा विशेष स्वागत गरिएको थियो । साथै उनीहरुलाई भोज खुवाएर सम्मान गरिएको थियो । कार्यक्रममा विश्वकर्मा भैल प्याखं तौलाछे भक्तपुरका दुई तीन दर्जन सदस्यहरु पनि सहभागी थिए । भक्तपुरको नाच टोलीले फागुनमा चितवनमा पुगेर नाच देखाएको थियो । टोलीमा झण्डै चार दर्जन संख्याका नाच सदस्यहरु पुगेका थिए ।




## सूचना

सडक हामी सबैको साझा सम्पत्ति हो । सडक निर्माणमा तपाई हाम्रो ठूलो धनराशी खर्च भएको हुन्छ । त्यसैले यसको संरक्षण एवं सम्वर्द्धन गर्नु हामी सबैको दायित्व हो । निर्माण भैसकेको सडकका विभिन्न खण्डमा अनाधिकृत रुपमा सडक सिमा अतिक्रमण गरी घरटहरा निर्माण गर्ने, होडिङ्ग बोर्ड राख्ने, सडकमा सामाग्री थुपार्ने, सवारी साधन धुने-पखाल्ने, पार्किङ गर्ने, सडकको नाली पुरी बाटो बनाउने तथा नालीमा ढल मिसाउने एवं फोहरमैला फाल्नेजस्ता कार्यका कारण सडक संरचना, सवारी आवागमन तथा वरीपरिको वातावरणमा समेत प्रतिकुल असर पर्ने हुनाले उपरोक्त कुनै पनि क्रियाकलापहरु नगर्न नगराउन हुन सम्वन्धित सबैसँग यस डिभिजन सडक कार्यालय हार्दिक अनुरोध गर्दछ ।




# चीनमा नुनबाट इन्धन उत्पादन



काठमाडौं । हामीले दिनहुँ खानाको स्वाद बढाउने नुन माथी चीनले भने इतिहास रचेको छ । चीनले संसारको पहिलो यस्तो थोरियम बनाएको छ, जसवाट चीनले आणविक रिएक्टर तयार गरेको छ । जसमा बिजुली मात्र उत्पादन भैरहेको छैन, अहिले चल्ने क्रममा नयाँ इन्धन पनि थपिएको छ । यो कारमा पेट्रोल भर्नु जस्तै हो, परमाणु प्रविधिमा यो पहिलो पटक यस्तो भएको हो ।

यो रिएक्टर चीनको गोबी मरुभूमिको किनारमा रहेको क्षेत्रमा निर्माण गरिएको हो । यो सानो तर शक्तिशाली छ । जसले ४ मेगावाट थर्मल ऊर्जा उत्पादन गर्दछ । यसमा सामान्य न्यूक्लियर रिएक्टरजस्तै युरेनियम नभई थोरियम नामको विशेष रेडियोएक्टिभ धातु जलाइन्छ, जुन पृथ्वीमा प्रशस्त मात्रामा पाइन्छ र खतरनाक पनि हुँदैन् ।

अब यो थोरियमलाई नुनमा मिसाउँदा एक विशेष प्रकारको घोल बन्छ, जसले इन्धन मात्र नभई चिसो प्रभाव पनि दिन्छ । र, चाखलाग्दो कुरा यो छ कि यो रिएक्टर उच्च तापक्रममा पनि धेरै चिसोमा काम गर्दछ अर्थात् विस्फोट वा पग्लने जोखिम कम हुन्छ ।

थोरियम युरेनियम भन्दा धेरै सुरक्षित छ । यो धेरै मात्रामा उपलब्ध छ र यसबाट उत्पन्न परमाणु फोहोर पनि धेरै कम हुने गर्दछ । साथै, यसबाट निस्कने उप उत्पादनहरूलाई भने परमाणु हतियारमा रूपान्तरण गर्न सकिन्छ । यसको मतलब चीनले सुरक्षित रिएक्टर मात्र बनाएको छैन, अप्रत्यक्ष रूपमा आफ्नो परमाणु शक्ति पनि बढाउँदै गएको छ ।

केही विज्ञहरू भन्छन् कि भित्री मंगोलियामा थोरियम खानीहरूबाट अब चीनको हजारौं वर्षका लागि बिजुलीको आवश्यकता पूरा गर्न सक्छ र त्यो पनि बिना प्रदूषण ।

यो प्रविधि नयाँ भने होइन । अमेरिकाले सन् १९६० को दशकमा यसबारे अनुसन्धान गरेको थियो । पग्लिएको नुन रिएक्टर पनि बनाइयो तर त्यस पछि उनले त्यसलाई छोडेर युरेनियमको बाटो रोजेको थियो ।

चिनियाँ वैज्ञानिक सु होङजी भन्छन्, 'अमेरिकाले छोडेका कागजात र अनुसन्धानलाइ हाम्रो टोलीले ध्यान दिएर अध्ययन गरयो, बुझ्यो र फेरि प्रयोगशालामा प्रयोग गर्न सुरु गर्यो । सन २०१८ मा चीनले यो रिएक्टर निर्माण गर्न थाल्यो र केही वर्ष भित्र टोली ४०० भन्दा बढी वैज्ञानिकहरुको साथ लिइएको थियो ।' उनका अनुसार १७ जुन २०२४ मा चीनको यो रिएक्टरले पूर्ण शक्तिमा काम गर्न थालेको थियो । जसलाई अहिले सार्बजनिक गरिएको हो । न्युजकारखाना

# च्याटजीपीटी विश्वको नम्बर १ डाउनलोड एप




एजेन्सी । मार्चमा ओपनएआईको च्याटजीपीटीले इन्स्टाग्राम र टिकटकलाई उछिनेर विश्वको सबैभन्दा धेरै डाउनलोड गरिएको एप बनेको छ । यो जानकारी एप फिगर्सको एक रिपोर्टमा दिइएको छ । ओपनएआईले आफ्नो च्याटजीपीटीमा घिपी-शैलीको कला स्टुडियो उपकरणहरू थपेदेखि, यो एपको डाउनलोड संख्या निरन्तर बढ्दै गएको छ ।

रिपोर्ट अनुसार ओपनएआईले नयाँ छवि उत्पादन उपकरण सुरु गरेदेखि डाउनलोडमा यो वृद्धि भएको हो । यो उपकरणको परिचय पछि, घिब्ली शैलीको स्टुडियो कला सिर्जना गर्ने प्रवृत्ति भाइरल भयो । यो सुविधा प्रयोग गर्न लाखौं मानिसहरूले एप डाउनलोड गरे, जसले गर्दा यसको डाउनलोड संख्याले रेकर्ड तोड्यो । हाम्रो अनुमान अनुसार, एप फिगर्स रिपोर्ट अनुसार, मार्चमा च्याटजीपीटीको ४ करोड ६० लाख डाउनलोडहरू थिए । जुन इन्स्टाग्रामभन्दा अलि बढी हो ।

**इन्स्टाग्राम र टिकटकभन्दा अगाडि**

इन्स्टाग्राम र टिकटकले पनि राम्रो डाउनलोड तथ्याङ्क रेकर्ड गरे, तर च्याटजीपीटीले उनीहरूलाई उछिनेको छ । च्याटजीपीटी का कुल ४ करोड ६० लाख डाउनलोडहरू थिए, जसमध्ये १ करोड ३० लाख आइओएसमा र ३ करोड ३० लाख एन्ड्रोइडमा थिए । इन्स्टाग्राममा पनि ४ करोड ६० लाख डाउनलोडहरू थिए, तर तिनीहरूको वितरण फरक थियो: आइओएस मा ५० लाख र एन्ड्रोइडमा ४ करोड १० लाख । टिकटक ४ करोड ५० लाख डाउनलोडका साथ पछ्याइएको छ, जसमध्ये ८० लाख आईओएसमा र ३ करोड ७० लाख एन्ड्रोइडमा डाउनलोड गरिएका छन् ।

च्याटजीपीटी को बढ्दो डाउनलोडमा कुनै शंका छैन । एपले फेब्रुअरीदेखि मार्चसम्म २८% ले वृद्धि भएको छ र २०२४ को पहिलो त्रैमासिकको तुलनामा २०२५ मा १४८% ले वृद्धि भयो । ओपनएआईका प्रमुख सञ्चालन अधिकृत ब्राड लाइटक्यापले हालै केही प्रभावशाली तथ्याङ्कहरू सार्वजनिक गरेका छन् । लाइटक्यापले च्याटजीपीटीको फोटो सिर्जना क्षमताहरूको पहिलो हप्तालाई हाइलाइट गर्दछ । गत मंगलबार यो सुविधा सुरु भएदेखि १३ करोडभन्दा बढी प्रयोगकर्ताहरूले ७० करोडभन्दा बढी तस्बिरहरू सिर्जना गरिसकेका छन् । यो तथ्याङ्कले यो सुविधा कति 'भाइरल' भएको छ भनेर देखाउँछ ।



थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### आन्दोलनरत पक्षका कारण जनसाधारणलाई सास्ती

देशको संघीय राजधानी त्यस माथि हरेक प्रकारका सेवा, सुविधा र सहज वातावरणका कारण हरेक नेपालीको सपनाको शहरको रुपमा परिचित काठमाडौं उपत्यकामा बाह्रै महिना प्रायः जसो कुनै न कुनै आन्दोलनका कार्यक्रमहरु हुनेगर्छ । विभिन्न संघ संस्था, राजनीतिक दल, पेशागत संघ संस्थाको आन्दोलनको केन्द्रविन्दु भनेको नै माइतीघर मन्दलादेखि संघीय प्रतिनिधिसभाको सभा भवन बानेश्वरसम्मको क्षेत्र हुने गरेको छ । यही सेरोफेरोमा करिब तीन साता यताबाट सामुदायिक विद्यालयका शिक्षक, चिकित्सक, कर्मचारीलगायतका प्रदर्शनबाट सर्वसाधारणको जनजीवन अस्तव्यस्त हुनपुगेको छ । तर देशको दुभाग्य नै मान्नु पर्छ, सरोकारवालाहरू सामान्य जनताले पाएको पिडा प्रति उदासीन छन् ।

लोकतन्त्र, गणतन्त्रमा शान्तिपूर्ण जुलुस, सभा, प्रदर्शन गर्न पाउने नागरिकहरूको मौलिक अधिकार नेपालको संविधान, २०७२ ले प्रत्याभूत गरेको छ । यसै पनि लोकतन्त्रमा सार्वजनिकरूपमा विरोध प्रदर्शन गर्ने नागरिकको अधिकारको सम्मान गरिन्छ । यसैले काठमाडौंमा भइरहेका आन्दोलनहरूलाई प्रतिबन्ध लगाउने कल्पना गर्नु पनि अलोकतान्त्रिक र असंवैधानिक हुन्छ । तर आन्दोलन गरिरहेका पीडित पक्षले आफ्नो आन्दोलनकै क्रममा अरुको अधिकार हनन भइरहेको र आफ्नो प्रदर्शनबाट स्थानीय जनजीवन अस्तव्यस्त भएकोमा चनाखो हुनुपर्ने हो । तर आन्दोलनकारीमा आफ्नो माग पुरा गराउने बाहेकको आम जनताले पाएका सास्तीप्रति संवेदनहीन बनेको छ, भने राज्य पक्षले पनि कुनै संवेदनशीलता देखाएन । दुवको हठका कारण सामान्य नागरिक चेपवामा परेका छन् ।

लोकतन्त्रमा अरूको अधिकार तथा सार्वजनिक हितको रक्षाको विषयमा सबैले सोच्नु पर्ने हो । खासगरी लोकतान्त्रिक अधिकारको अभ्यास तथा अरूको हक र सार्वजनिक हितका बिचमा सन्तुलन हुने गरी राज्यले नीति तर्जुमा गर्नुपर्ने हो । विश्वका अरू लोकतान्त्रिक मुलुकहरूमा पनि विरोध गर्ने अधिकार र सार्वजनिक सेवाबीच सन्तुलन हुनेगरी प्रदर्शनको व्यवस्था मिलाइएको हुन्छ ।

सार्वजनिक हितको रक्षा गर्नु सरकारको पहिलो कर्तव्य हो । यस्तै आन्दोलनरत पक्षले पनि नागरिकको दायित्व निर्वाह गर्नुपर्ने हुन्छ । नत्र चैत्र १५मा भएको 'तीनकुनेको रौद्र घटना' दोहोरिन नदिन राज्यले संयमित भएर बल प्रयोग गर्नुपर्छ । दुवै पक्ष संयमित भए प्रदर्शन शान्तिपूर्ण हुने उदाहरण पनि त देखिएकैछ ।

विरोध वा मागप्रति संवेदनशील भएर सम्बोधन गर्ने तत्परता सरकारले देखाउन सक्नु पर्छ । लोकतन्त्रमा गरिने उत्तम अभ्यास यही हो । तर सरकार सामान्य जनता तथा आन्दोलनरत पक्ष प्रति संवेदनशील बन्न नसक्नुले द्वन्दको बातावरण सिर्जना हुन सक्छ ।

तसर्थ आन्दोलनरत पक्षले आफ्ना माग सुनाउन सामान्य जनताको जनजीवन अस्तव्यस्त नहुने रचनात्मक उपायहरू खोज्नु उचित हुन्छ । अहिले जसरी सास्ती भोगिरहनु परेका खण्डमा जनसाधारण नै आन्दोलनको प्रतिकार गर्न अगाडि सर्न सक्छन् । यस तर्फ दुवै पक्ष सजग हुन आवश्यक छ ।

# दुई दशकमै किन लाग्यो व्यवस्था विरोधी नारा ?

● डा. शोभाकर पराजुली

'मन्त्री होउँला, ठूल्ठूला कुर्सीमा बसौंला, मोजमस्ती गरौंला भनेर हामी राजनीतिमा लागेका होइनौं, खान नपाएकाहरूका पेटमा अन्न परोस्, हाँस्न नपाएका ओठमा हाँसो छाओस् दुनियाँदार, रैति, प्रजा हुँदै नागरिक बन्न पाएको नेपाली जनताले स्वतन्त्रता र सुख शान्ति अनुभूति गर्न पाओस् भनेर हामी राजनीतिमा लागेका हौं' कुनै बेला महामानव बिपी कोइरालाको यो मौलिक भाष्यलाई सायद आजको नेपाली कांग्रेसले बिर्सिसकेको छ ।

सडकमा जुन प्रकारले आज व्यवस्थाविरुद्ध नाराहरू चर्किरहेका छन् , यो त्यसैको परिणाम हो कि नेपाली कांग्रेसजस्ता राजनीतिका ऐतिहासिक आरोहअबरोह छिचोल्दै आएका राजनीतिक दलले आफ्नो मूलबाटो बिर्सिए । जसका कारण दुई दशक नबित्दै जनताले ल्याएको व्यवस्थाविरुद्ध अहिले सडक, सदन र सरकारमै पनि आगो बलिरहेको छ । नेपाली कांग्रेसजस्ता पुराना र आफैमा इतिहास बोकेका राजनीतिक दलका लागि यो एउटा ठूलो र चुनौतीपूर्ण समय हो । र नेपाली कांग्रेसको अर्को एउटा इतिहास के पनि हो भने राष्ट्रमा आउने यस्ता धेरै चुनौती र परिवर्तनका संघारमा नेपाली कांग्रेस नै अगुवाई गरेको छ । अर्थात् राष्ट्र, जनता अनि राष्ट्रियता र लोकतन्त्रमाथि जब जब आक्रमण हुन थाल्छ त्यो बेला नेपाली कांग्रेसले त्यसलाई पार लगाएको छ । यसरी हरेक परिवर्तनका मोडहरूमा नेपाली कांग्रेसकै नेतृत्व इतिहासमा लेखिएको छ । चाहे त्यो सात सालको क्रान्ति होस् वा २०४६ सालको परिवर्तन वा २०६२/०६३ को जनआन्दोलन र त्यसपछिको व्यवस्था परिवर्तन ।

२०६२/०६३ को परिवर्तन सम्भवतः नेपाली इतिहासको अलि फरक चरित्र बोकेको परिवर्तन हो । यसले मात्रै नागरिक अधिकार स्थापित गरेको थिएन । बरु २४० वर्षदेखिको एउटा वंशानुगत शासकीय परम्परा पनि सदाका लागि अन्त्य भएको थियो । परिवर्तनका यिनै र यस्तै आयामहरू बोकेर आजको व्यवस्था यहाँसम्म आइपुगेको छ । र, पनि यो व्यवस्था हुर्कन नपाउँदै फेरि यसकै विरुद्ध देश विभाजित हुन पुगेको छ । यो कसरी र किन हुँदैछ भन्ने कुराको भेउ पाउन मुस्किल छैन । इतिहासमा यस्ता आयाम र नियतिहरूका सामना हरेक व्यवस्थाले गरिरहेकै हुन्छन् । हरेक परिवर्तनपछि प्रतिक्रान्ति वा प्रतिक्रियात्मक तत्वहरू सल्लबलाइरहन्छन् । त्यसमा पनि २०६२/०६३ को जनआन्दोलनले इतिहासको एउटा बिरासतलाई बिनारक्तपातपूर्ण तरिकाले पन्छाएको थियो । एउटा तानाशाही, वंशानुगत राजशाही व्यवस्थाको त्यति सभ्य र सम्मानपूर्ण बिदाई लगभग संसारका कुनै पनि राष्ट्रमा भएका छैनन् । तथापि जसले अहिले फेरि उनै 'राजा'को नाममा व्यवस्था खलबल्याउने प्रयास गरिरहेको छ, त्यसको परिणाम र परिणति निकै चोटिलो हुनसक्छ भन्ने कुरा त्यस्ता तत्वहरूले बुझ्केकै हुनुपर्छ । यो व्यवस्थाको नेतृत्व पनि नेपाली कांग्रेसले नै गरेको हो । त्यसका एकजना कमाण्डर गिरिजाप्रसाद कोइराला अब हामीमाझ हुनुहुन्न तथापि परिवर्तनका अरु सारथीहरूले नै अहिले देशको मूल राजनीतिको नेतृत्व गरिरहेका छन् ।

अहिलेको अवस्था आउनुमा धेरथोर जिम्मेवार त सबै राजनीतिक दल तिनका नेतृत्व नै हुन् । तर जसरी परिवर्तनको नेतृत्व नेपाली कांग्रेसले गरेको थियो त्यसको मर्म अनि भावनाअनुरुप आजको परिस्थितिको मुख्य जिम्मेवार नेपाली कांग्रेस नै हो । सँगसँगै यस्तो अवस्थाको शान्तिपूर्ण समाधान अनि लोकतन्त्रको संस्थागत सबलिकरणको मुख्य दायित्वबाट पनि नेपाली कांग्रेस पन्छिन पाउँदैन । किनकि नेपाली कांग्रेसमात्रै एउटा यस्तो राजनीतिक दल हो, जसको जगमै थुप्रै ऐतिहासिक जिम्मेवारीहरूको निकै ठूलो भारी छ । त्यसलाई रछ्यानमा बिसाउने छुट आजको नेपाली कांग्रेसका नेतृत्वलाई कुनै पनि हालतमा छैन र हुँदैन ।

केही समयदेखि सल्बलाई रहेका राजावादीहरूले गत चैत १५ गते काठमाडौंको तीनकुनेमा जुन खालको हर्कत र रबैया देखाए त्यसबाट प्रस्ट हुन्छ कि त्यो राजनीतिक क्रियाकलाप हुँदै होइन । त्यसरी राजनीतिक समझदारी हुनैसक्दैन । राजावादीले भन्ने गरेका ' नवीन समझदारी' मूलमर्म त्यस्तो हुँदैन र हुनैसक्दैन । यो राजावादी वा तिनका अघोषित नेतृत्वले पक्कै बुझ्केकै होला । एकप्रकारले असम्भवजस्तै लाग्ने फेरि त्यही राजतन्त्र अनि राजसंस्थाका बुख्याँचाहरू स्थापित गर्ने, त्यो खालको हिंसात्मक आन्दोलन नेपाली समाजले कहिल्यै स्वीकार गर्न सक्दैन । त्यसमा जति पूर्वराजा ज्ञानेन्द्र अनि उनका आसेपासे वा 'कथित' कमाण्डरहरूको हात छ, अब त्यस्तो आउन नदिन नेपाली कांग्रेस, नेकपा एमाले र नेकपा माओवादीजस्ता लोकतन्त्रवादी दलहरूको दायित्व र जिम्मेवारी पनि उत्तिकै छ । किनकि यी दलहरू भने यो परिवर्तन प्राप्तिका मुख्य साझेदारहरू हुन् । गणतन्त्रका सारथीहरू हुन् । यसबाट एकअर्कालाई दोष थुपारेर कोही कतै भाग्न पाउँदैन । जसरी तीनकुने प्रदर्शनका क्रममा व्यक्तिका निजी सम्पत्तिमाथि आक्रमण भएको छ । पत्रकारलाई जिउँदै जलाइएको छ । अनि बाटो हिँड्ने बटुवालाई गोली हानेर ज्यान लिइएको छ । सरकारी संस्थानहरू जलाइएका छन् । व्यापारिक प्रतिष्ठानहरूमा लुटपाट मच्चाइएको छ । अनि कानुनको धज्जी उडाइएको छ । यी सबको निष्पक्ष छानबिन हुनुपर्छ र दोषीलाई कानुनी कारबाही हुनुपर्छ । चाहे त्यो निर्मल निवास होस् वा कथित कमाण्डर । देउवा, ओली र प्रचण्ड नै किन नपरुन् । सबैले आ-आफ्नो ठाउँबाट गल्ती, कमजोरी र अराजक अनि अराजनीतिक गतिविधिको जिम्मेवारी लिनैपर्छ र त्यसप्रति उत्तरदायी हुनैपर्छ ।

एउटा वंशानुगत शासकीय परम्पराको अन्त्य त्यत्तिकै र अचानक भएको होइन । यसका लागि नेपाली जनता र यहाँका राजनीतिक दलहरूले लामो लडाईं लडेका छन् । कठीन संघर्ष अनि बलिदानको रक्तिम इतिहासहरू परिवर्तनका यी लडाइँमा लेखिएका छन् । चाहे त्यो ०७, साल, ०४६ साल वा २०५२ सालको माओवादी जनयुद्ध । त्यसपछिको जनआन्दोलन अनि तीसँगसँगै मधेस र थारु आन्दोलनहरू । यी सबै संघर्षको परिणाम आजको गणतन्त्र हो ।

त्यस हिसाबले २०६३/०६३ को जनआन्दोलन यसको एउटा मुख्य प्रस्थान बिन्दु बन्यो भने राजा वा राजसंस्था राख्ने कि नराख्ने, कस्तो राजसंस्था राख्ने भन्ने कुरा त सात साल वा त्योभन्दा पनि अघिदेखि नै चल्दै आएको हो । हरेक परिवर्तनपछि उत्पन्न हुने संक्रमणकालीन परि स्थिति र कलहहरूलाई राजनीतिक दलले सम्हाल्न नसक्दा नै कतिपय उपलब्धिहरू खेर गएका छन् । २०४६ सालको परिवर्तनसँगसँगै मौलाउन थालेको प्रजातन्त्रको कलिलो घाँटी जसरी निमोठिन पुग्यो, त्यो राजनीतिक दलहरूको त्यस्तै हर्कतको परिणाम थियो । खासगरी माओवादी द्वन्द्व सुरु भएसँगै देश फेरि गृहयुद्धको बाटोमा जाँदै थियो । यता दलहरूबीच पनि कलह उत्कर्षमा पुगिरहेको थियो । पार्टीहरू आफ्नै नेतृत्वको सरकार ढाल्न र बनाउन उद्यत थिए । एकले अर्कोलाई लछार्न अनि पछार्न लागिपरेका थिए, उता जंगलमा माओवादीले युद्धको सनही अझ तेज पार्दै थियो । अविश्वासको मत, प्रतिनिधिसभाको विघटन, पार्टीको आन्तरिक विभाजन अनि अल्पमत र बहुमतका सरकार पनि यही बेलाका परिघटना थिए । मध्यावधि निर्वाचनको नियति पनि मुलुकले भोग्नुपर्‍यो । माओवादी युद्धका कारण दलीय दूरी त बढेकै थियो, त्यसमा दरबार पनि ' भिलेन' बनेर उभिन थाल्यो ।

२०५८ साल जेठ १९ गते भएको दरबार हत्याकाण्ड देशमा अर्को उथलपुथलको एउटा टर्निङ प्वाइन्ट बनिदियो । ज्ञानेन्द्र शाहले सत्ताशक्ति आफ्नो हातमा लिनासाथ माओवादीले आफ्नो युद्धको गति अझ तेज र विस्तार गरिरहेको थियो । २०५८ साल मंसिर ८ गते दाङमा सैनिक ब्यारेकमाथि आक्रमण गरेर माओवादीले दरबारविरुद्ध सिधा धावा बोलेको थियो । मंसिर ११ गते तत्कालीन शेरबहादुर देउवा सरकारले संकटकाल घोषणा गर्‍यो । त्यसबाट नेपाली कांग्रेसभित्रको आन्तरिक कलह झन उत्कर्षमा पुग्यो । संकटकाल थप गर्ने विषयमा भएको आन्तरिक मतभेदले प्रतिनिधिसभाको विघटनमात्रै भएन, बरु नेपाली कांग्रेसको बाटो नै फाट्यो । शेरबहादुर देउवाले कांग्रेसका केही नेताहरू लिएर नयाँ पार्टी बनाउनुभयो । राजनीतिक घटनाक्रमहरू यत्तिमै सिमित रहेनन् । तत्कालीन युद्धरत माओवादीले रोल्पाको होलेरीमा बन्धक बनाएका केही सुरक्षा अधिकारीलाई छुटाउनका लागि सैनिक परिचालनको अनुमति माग्दा राजा वीरेन्द्रले अपमान गरेर फर्काएपछि नै गिरिजाबाबु र दरबारबीचको मनमुटाव अझ चर्किएको थियो ।

राजा ज्ञानेन्द्रले संकटकाल घोषणा गरेपछि अन्योलपूर्ण अवस्थामै गिरिजाबाबुले 'राजतन्त्र' जान्छ भनिसक्नुभएको थियो । त्यसका लागि उहाँले मूलधारमा रहेका संसदीय दलमात्रै होइन, जंगलमा युद्ध गरिरहेको माओवादीसँग समेत भित्री सहमति गरिसक्नुभएको थियो । संसदबिना सरकार र व्यवस्था प्रजातान्त्रिक नहुने भन्दै संसद पुनःस्थापनालाई बटम लाइन बनाएर गिरिजाबाबु सबै राजनीतिक दलको साथ लिँदै २०६० वैशाख अन्तिमतिर आफैँ सडकमा ओर्लिनुभयो । यो आन्दोलनलाई सबै राजनीतिक दल र माओवादीको पनि नैतिक समर्थन थियो । २०६२ सालको अन्तिमतिर आन्दोलनको उत्कर्षमा त माओवादी पनि अरू दलहरूसँगै मिसिएर सडक आन्दोलनमा आइसकेको थियो । माओवादीसहित सारा राजनीतिक दल अनि लाखौं जनताले दरबार घेर्न थालेपछि २०६३ साल वैशाख ८ गते राजा ज्ञानेन्द्रले एउटा शाही घोषणा गरे । तर आन्दोलन त्यत्तिकैमा रोकिएन । बरु दलहरूले अझ सशक्त आन्दोलनको घोषणा गरे । यो घोषणामा राजा ज्ञानेन्द्रले आफूले सत्ता छोडेको घोषणा गरेका थिएनन् । सात दललाई प्रधानमन्त्रीका आह्वान गर्न आउनूमात्रै भन्ने सन्देश दिएका थिए । अन्ततः वैशाख ११ गते राजा ज्ञानेन्द्रले जनताको नासो जनतालाई नै फिर्ता गर्न बाध्य भए । संसद पुनःस्थापना भयो । त्यसमा सबै दलहरूले सहमति गरेर माओवादीलाई पनि संसदमा भित्र्याउने सहमति भइसकेको थियो । आखिरमा गिरिजाबाबुले आफ्नो अठोट पूरा गरेरै छोड्नुभयो । त्यो बेला गिरिजाबाबुले नचाहेको भए, माओवादीको युद्ध के हुन्थ्यो अनि देशको अवस्था के हुन्थ्यो होला ? त्यो परिस्थितिको आँकलन नै गर्न निकै कठिन हुन्छ ।

२०६२/०६३ मा सडक आन्दोलन सुरु हुनुअघि नै गिरिजाप्रसादले नै पहल गरेर माओवादीसहित सबै राजनीतिक दलबीच १२ बुँदे सम्झौता भइसकेको थियो । संसद पुनःस्थापना भएपछि गिरिजाबाबु फेरि एकपटक देशको प्रधानमन्त्री बन्नुभयो । यो भने अन्तरिम सरकार थियो अनि गिरिजाबाबुको राजनीतिक जीवनको अन्तिम इनिङ पनि यही नै बन्यो । उहाँकै नेतृत्वमा २०६४ सालमा नेपालको इतिहासमै पहिलोपटक संविधानसभाको निर्वाचन भयो । यही संविधानसभाले 'जनताको गणतान्त्रिक संविधान'का रुपरेखा कोर्न सुरु गर्‍यो र दोस्रो संविधानसभाले २०७२ साल असोज ३ गते संविधान जारी गर्‍यो ।

संविधानको त्यही जगमा आजको परिवर्तन सम्भव भएको हो । तर बिडम्बना फेरिएको एउटा व्यवस्थाविरुद्ध २० वर्षमै 'मूर्दावाद'को नारा लाग्न थाल्यो । खासमा फेरि राजसंस्था माग्नेको संख्या न्यून छ । त्यसमा अहिले जुनखाले भीड देखिएको छ त्यसमा धेरै त अहिले राजनीतिक नेतृत्वप्रतिको असन्तुष्टि नै हो । जसलाई राजावादी ठान्नेले कहिल्यै पूरा नहुने आफ्नो स्वार्थका लागि प्रयोग गरिरहेका छन् ।

अहिले संसदमा सबैभन्दा ठूला दल भनिएका नेपाली कांग्रेस र नेकपा एमाले मिलेर बनेको सरकार छ । दलीय साझेदारीमा सरकार बन्नु भनेको प्रक्रिया सामान्यतया संसदीय परम्परा नै हुन् । तर तिनका लागि खासखास अवस्था, प्रकृति र प्रवृत्ति हुन्छन् । देशमा जन्मिएका नयाँनयाँ परिस्थितिले त्यसको अवस्था सिर्जना गरेको हुन् । बहुदलीय संसदीय अभ्यासको यही परिणतिमा यो गठबन्धन सरकार बनेको हो । यी दुवै दल एकप्रकारले भन्ने हो आफैँमा इतिहासका धेरै पानाबाट सिर्जित दल हुन् । नेपालमा दलीय राजनीतिक व्यवस्था कायम गर्नका लागि यी राजनीतिक दलको आआफ्नै विशिष्ट योगदान र भूमिका छन् । यस्तो सरकारले शासन व्यवस्था चलाइरहेका बेलामा पनि नागरिकमा किन असन्तुष्टि बढिरहेको छ, अनि किन व्यवस्थाविरोधी नाराहरू झन् झन् उग्र भइरहेका छन् ? यस्तो अवस्थामा नागरिकको असन्तुष्टि सम्बोधन गर्नुको साटो सरकार भने त्यही असन्तुष्टिलाई चिढ्याउने काममा लिप्त छ । त्यसलाई अझ जिम्मेवार ठानिएको राजनीतिक दल वा भनौं नेपाली कांग्रेसले नै काँध थापिरहेको छ । अब राजनीतिको काँध फेरिनैपर्छ र त्यसको नेतृत्व पनि नेपाली कांग्रेसले नै गर्नुपर्छ ।

अहिले बिथोलिएको जुन परिस्थिति छ त्यसका लागि कुनै लामो भाषण दिनुपर्दैन । कसैलाई दोषी करार पनि गर्नुपर्दैन । कोही कसैले एकअर्काविरुद्ध नाराजुलुस वा आरोप प्रत्यारोपहरू गर्नैपर्दैन । त्यसको लागि मात्रै अब एउटा निर्मम समीक्षाको जरुरी छ । दल सच्चिनै पर्छ । नागरिकका अपेक्षा, आंकाक्षा र मनोभावलाई सम्बोधन गरिनैपर्छ । लोकतन्त्रको विकल्प राजतन्त्र वा अरु कुनै पनि तन्त्र हुनैसक्दैन । बरु त्यसको विकल्प भनेकै अझ उन्नत लोकतन्त्र हो । गणतन्त्रको अझ सुदृढीकरण हो । दल सच्चिए, नेतृत्व गम्भीर भए लोकतन्त्र अनि गणतन्त्र त्यसै जोगिन्छ ।

संकेतस्वरूप 'कू' को अठचालीस घण्टाजति अघि भएको भेटमा महेन्द्रले बीपीसँग असन्तोष प्रकट गरेकै पनि रहेछन्, 'पीएम, तपाईं कांग्रेसीहरूले मेरो ज्यादै बदनाम गर्नुको कारण के हो ? बीपीबाबु, अब तपाईं र ममध्ये एक जना रहनुपर्‍यो (कोइराला, विश्वेश्वरप्रसाद, 'आत्मवृत्तान्त,' पृ. २७५)।'

'राजा र मेरो घाँटी जोडिएको छ' भन्ने भनाइ र 'पञ्चहरू कांग्रेससँग नतर्स, कांग्रेसहरू पञ्चहरूसँग नझस्क' भन्ने बीपीको तत्कालीन समयलाई दिशाबोध गर्ने भनाइहरू अहिलेको अवस्थामा पनि मननीय छन् । समकालीन राजनीतिको विश्लेषणका आधारमा बीपीले व्यक्त गरेका यी भनाइहरूको मर्म बुझ्दै त्यसको गहनतामा पुगेर आत्मबोध गर्न सक्यौं भने हामीलाई समाजको समकालीन अवस्थाको विश्लेषण गर्दै समस्याको पहिचान गर्न र ती समस्यालाई सम्बोधन गर्नका लागि राष्ट्रिय एकता निर्माण गर्न मद्दत पुग्ने छ ।

देश रह्यो भने आन्तरिक प्रतिस्पर्धा गर्ने हो । घरेलु शक्तिहरूबीचको प्रतिस्पर्धा त देशलाई समृद्धिको मार्गमा लैजाने कार्यक्रम कसले राम्रो ल्याउने भन्ने कुरामा हो । नागरिकको अधिकार कसरी सुनिश्चित र उपयोगी बनाउन सकिन्छ भन्ने कुरामा हो । राज्य प्रदत्त सेवा सुविधामा कसरी समान पहुँच स्थापित गर्न सकिन्छ भन्ने कुरामा हो । त्यस्तै पिछडिएका सीमान्तकृत नागरिकहरूको राज्य सञ्चालनमा सहभागिताको सुनिश्चितता कसरी गर्ने भन्ने कुरामा हो । यो कुरामा सधैं प्रतिस्पर्धा गर्दै राम्रो नीति वा कार्यक्रमलाई जनअनुमोदन गरी लागू गर्ने अभ्यास नै बहुदलीय लोकतान्त्रिक अभ्यास हो । यो प्रक्रियामा हुने प्रतिस्पर्धाको प्रतिक्रियास्वरूप वा आवेगमा आएर राष्ट्रिय हितको विषयमा पनि एक ठाउँमा उभिन नसक्नु भनेको अलोकतान्त्रिक र सर्वसत्तावादी चिन्तन हो ।

बीपीले आफूलाई धेरै अप्ठ्यारा परिस्थितिमा समेत लोकतान्त्रिक चरित्र प्रदर्शन गरेका थुप्रै दृष्टान्त छन् । उहाँले यो सन्दर्भमा कहिल्यै पनि लोकप्रिय हुने चाहना राख्नु भएन, सही मार्ग र निर्णयतर्फ नै अग्रसर रहन चाहनु भयो । देश डुब्नै लाग्दा, नेपालको नक्सा नै नरहने अवस्था सिर्जना हुन लाग्दा उहाँले 'मलाई थुनेर अपदस्त गर्ने राजा वा राजसंस्थासँग मेलमिलाप गर्दैन' भनेर अड्डी लिएको भए नेपाल सिक्किम हुने अवस्थामा उन्मुख हुने थियो । त्यो 'व्यक्तिगत इगो' लाई तिलाञ्जलि दिएर राष्ट्रियता र देशभित्र आफ्नो उपस्थितिसँगै जनपक्षीय राजनीतिमा आउने उत्साहका लागि बिपीले राजासँग घाँटी जोडिएको अभिव्यक्ति दिएर अप्ठ्यारो परिस्थितिमा नेपालका घरेलु शक्तिहरू एकै ठाँउमा उभिन्छन् भन्ने स्पष्ट सन्देश विश्वसामु दिनुभयो ।

खबरहबबाट

# छपाई र सूचनाको क्रान्तिः एक संक्षिप्त इतिहास



छपाई मेसिनको आविष्कारले संसार बदल्यो । पहिला ज्ञानको प्रसार सुस्त गतिमा हुन्थ्यो भने छपाई मेसिनको आविष्कारले ज्ञानको प्रसारको गतिलाई तीव्र बनाइदियो । हुन त लामो समयदेखि छपाई प्रविधि अस्तित्वमा थियो तर सही समयमा सही ठाउँमा यो प्रेस पुगेपछि जंगलको आगोसरी प्रिन्टिङ प्रेस फैलियो र संसारलाई यसले बदल्यो ।

**प्रिन्टिङ प्रेस कसले आविष्कार गर्यो ?**

प्रिन्टिङ प्रेस कसले गर्यो, यसका बारेमा धेरै मतान्तर छन् किनभने किटानीका साथ फलानो व्यक्तिले भन्ने कतै लेख्य प्रमाण फेला परेको छैन । पूर्वीय सभ्यताबाट बेखबर पश्चिमाहरूले भने चीन र कोरियामा प्रचलित विधिलाई नक्कल गरेर यहाँ पनि सोही काम गर्न थाले । छैटौं शताब्दी ईशापूर्वमा प्राचीन मिश्रबासीहरूले प्रिन्टिङको काम कपडामा छाप लगाउने बाहेक अन्यमा सदुपयोग गरेका थिएनन् । काठको ब्लक बनाउने, त्यसलाई रङमा चोबल्ने र त्यसलाई कपडामा छाप हान्ने विधि शताब्दिऔँदेखि मिश्रमा चलिरहेको थियो । त्यो विधि चीन र कोरियाबाट त्यता आयात भएको अनुमान गरिन्छ ।

पछि चीनमा कागजको आविष्कार भयो । सन् १०५ मा हान राजवंशको पालामा नेपाली कागज जसरी बनाइन्छ, सोही प्रक्रियाअन्तर्गत कागज बनाउने काम हुन्थ्यो ।

धार्मिक कार्य सुरक्षित राख्नका लागि यस्ता कागज र छपाईको काम हुन थाल्यो । संसारमा पहिलो पटरक कागजमा लेखिएको सामग्री नै वाङ जिएद्वारा लिखित डायमन्ड सूत्र हो भन्ने दाबी गरिन्छ । यो सन् ८६८ मा छापिएको थियो ।

६ शताब्दीसम्म चिनियाँहरूले कागज निर्माण प्रक्रियालाई निकै गोप्य राखेका थिए । सन् ७५१ ताका तालासको युद्धमा ताङ राजवंशको हारपछि मुस्लिम शासक अब्बास खलिफातले चिनियाँहरूलाई बन्दी बनाएका थिए । उनीहरूबाट नै कागज बनाउने प्रक्रिया सिकिएको थियो । पछि हालको उज्बेकिस्तानको समरकन्दमा कागज कारखाना नै बनाइयो । त्यो बेला सिल्कर ोडको प्रमुख विश्रामथलोका रूपमा समरकन्द नै थियो । ईस्लामी दुनियाँमा कागज निकै मूल्यवान् सामग्रीका रूपमा खरिदबिक्री हुन थाल्यो । क्रमशः युरोपमा पनि यसको चर्चा फैलिन थाल्यो । सन् ११५१ मा भने युरोपमा पनि उत्पादन हुन थाल्यो ।

**प्रेसको स्थापनाअघि ज्ञान कसरी सुरक्षित राखिन्थ्यो ?**

युरोपमा कागज बनाउने विधि र प्रिन्टिङ प्रेस छिर्नु कयौँअघिदेखि पवित्र ग्रन्थहरू सुरक्षित राख्ने गरिन्थ्यो । पेपिरस नामक रूखको बोक्रामा जानकारीहरू अंकित गरिन्थ्यो । यो रूख त्यो बेला नाइल नदीको किनारमा पाइन्थ्यो । रोमले ईशापूर्व ३० मा मिश्र (इजिप्ट)माथि विजय हासिल गरेपछि उसले यसलाई उपयोग गर्ने एकलौटी अधिकार प्राप्त गर्यो ।

त्यो बेला यिनै कागजमा किताबहरू लेखिन्थ्यो र त्यो बेला हातैले लेखिन्थ्यो । पेपिरसका पातला बोक्रालाई पट्याउने वा रोल गर्ने सुविधा हुन्थ्यो । सनको पाँचौं शताब्दीताका रोमको पतन हुन थाल्यो र कागजको माग पनि क्रमशः कमजोर हुन थाल्यो ।

तर रोमनको त्यो विधिभन्दा चीन र कोरियामा बनाइने कागजहरू सस्तो पनि र हलुङ्गो पनि हुनाले त्यसको लोकप्रियता बढ्न थाल्यो ।

पेपिरसको उपलब्धता खस्किनु र चिनियाँ कागजको लोकप्रियता बढ्नुले मध्ययुगमा कागजको माग बढ्यो । खासगरी क्रिश्चियनहरूले आफ्नो पवित्र धर्मग्रन्थ बाइबलको बढीभन्दा बढी प्रचारका लागि कागज बढीभन्दा बढी किन्नुपर्ने आवश्यकता बढ्दै जान थाल्यो । कागजमा सारा धर्मग्रन्थ उतार्नु त्यो बेला निकै महँगो थियो । समय पनि निकै बढी लाग्थ्यो । त्यति मात्र होइन, हातले गरिने काममा धेरै गल्तीहरू पनि हुन्थे । तर यति अप्ठेराका बाबजुद पनि



उनीहरूले आफ्नो धर्मग्रन्थको संरक्षणका लागि काम गरे ।

**प्रिन्टिङ प्रेस कसले बनायो ?**

कागज बनाउने विधि थाहा भयो र युरोपभर त्यो विधि लोकप्रिय हुन थाल्यो । तर छपाई गरिने टाइपोग्राफीको कला चाहिँ अझै पनि चिनियाँ र कोरियालीहरूकै सिद्धता रहिरह्यो । सन् १०४० ताका चीनमा टाइपोग्राफीमा काम गर्ने व्यक्ति एक जना मात्र थिए र उनको नाउँ थियो, पि शेङ । उनले माटोबाट अक्षरका ब्लकहरू बनाउँथे । कोरियाली राजा ताएजोङले आफ्नो क्षेत्रमा यसको लोकप्रियता बढाउन स्वयं लागिपरेका थिए । पछि उनले माटोको प्रयोग छाडेर काठको ब्लक बनाउने कुरामा ध्यान केन्द्रित गर्न लगाए । काठे ब्लकको लोकप्रियता रातारात बढ्न थाल्यो । जति जति लोकप्रिय हुँदै जान थाल्यो, यसमा विभिन्न किसिमका प्रयोगहरू पनि हुँदै जान थाले । ती प्रयोगले यसको दीर्घप्रयोग, लामो समयसम्म उपयोग गर्न मिल्ने जस्ता कुरामा क्रान्तिकारी छलाङ मार्न थालियो ।

तर यसको पनि एउटा सीमा थियो । चिनियाँ र कोरियालीहरूको ब्लकमा आधारित प्रविधिको ठूलो समस्या चाहिँ यो ब्लक एक पटक प्रयोग भएपछि अर्को पटक प्रयोग हुँदैनथ्यो । त्यसैले सारा मिहिनेत खेर जान्थ्यो । नयाँ ब्लकका लागि फेरि पनि शुरूदेखि काम गर्नुपर्ने हुन्थ्यो । त्यसमाथि उनीहरूको अक्षर पनि हजारौँको संख्यामा हुन्थे । त्यसैले थप अनुसन्धान, परिमार्जनमा उनीहरूको ध्यान जान सकेन ।

सन् १३९० को दशकतिर जर्मनीको मेइन्ज रोमन होली एम्पायरको एक भाग थियो । त्यहीँ जन्मिएका जोहानेस गटेनबर्गलाई आधुनिक प्रिन्टिङ प्रेसको जनकका रूपमा मानिन्छ । उनी धातुको काम गर्थे । उनले टाइप (अक्षर)को प्रणालीगत सुधार गरे । यति मात्र होइन, उनले त्यसलाई व्यापक रूपमा उत्पादन पनि गरे । सिसा, टिन र अन्य धातुको मिश्रणबाट बनाइएको टाइप (अक्षर) त्यो बेला ल्याटिनी भाषाको मात्र हुन्थ्यो ।

गटेनबर्गको छापाखानाले विभिन्न कागजपत्र छपाई, चित्रकारिताजस्ता कुरामा परिवर्तन ल्यायो । पहिलेको काठेब्लकको प्रविधिलाई यसले भत्काइदियो । एउटा निश्चित फ्रेममा साना साना अक्षर टाइपहरू लाइनमा मिलाएर राखेपछि खाली कागजमा दह्रोसँग थिच्दा मसी हालिएको फ्रेम खाली कागजमा जोडिन्थ्यो । यसले फ्रेममा रहेका उल्टा फन्टहरू सुल्टिएर कागजमा बस्थ्यो । (त्यो बेला कसरी छापिन्थ्यो भन्ने एउटा नमुना भिडियो यहाँ हेर्नुहोस्ः)

यो अहिले कुनै चमत्कार होइन तर हजार वर्षअघि चमत्कारभन्दा कुनै कम थिएन । यसले कामको गति तीव्र बनायो । यसले दिने फिनिसिङ टच अघिल्ला विधि र प्रविधिको भन्दा गज्जबको थियो । त्यसैले यो निकै लोकप्रिय भयो ।

**सबैभन्दा पहिले छापिएका किताब के थिए ?**

गटेनबर्गको मेसिनले व्यापक रूपमा किताब छाप्न सजिलो बनायो । यसले छापेको गुणस्तर पनि अन्य विधिको भन्दा निकै उच्च थियो । त्यसैले यो रातारात लोकप्रिय भयो । यो मेसिनबाट गटेनबर्गले ४२ पंक्तिको बाइबललाई व्यापक रूपमा छापे । यसरी व्यापक रूपमा प्रिन्टिङ प्रेसमा छापिएको कृति नै बाइबल हो । सन् १४५० को दशकमा धार्मिकसँगै विभिन्न सम्प्रदायका गोप्य कागजातहरू प्रकाशन गरिए ।

यसको सहजतालाई महसुस गर्दै चाँडै नै युरोपभरि आवश्यकता महसुस गरियो र कुना कुनामा प्रिन्टिङ प्रेसहरू खुल्न थाले । प्रकाशन उद्योगमा सन् १५०१ भन्दा पहिलेको अवधिलाई क्रेडल अवधि भनिन्छ । क्रेडल प्रविधिमा ग्रिक र रोमन विभिन्न किताबहरू प्रकाशन गरिएको थियो ।

**इस्लामिक संसारमा प्रिन्टिङ उद्योगले कस्तो प्रभाव पार्यो ?**

प्रकाशन उद्योगको विस्तारसँगै भेनिस शहर प्रिन्टिङ प्रेसहरूको स्वर्गका रूपमा परिचित हुन थाल्यो । यहाँको छपाई गुणस्तर अन्यत्र भन्दा गज्जबका हुन्थे । सन् १५३० को दशकमा पहिलो पटक कुरान छापियो । यसलाई पेगानिनो पेगानिनी र उनका छोराहरूले पहिलो पटक छापेका थिए । तर मुस्लिमहरू क्रिश्चियन जति उदार थिएनन् । उनीहरू हातैले लेख्ने अरबिक लेखनप्रणालीमा बढी आशक्त थिए । पेगानिनो पेगानिनीको ठूलो लगानी त्यसै खेर गयो । धेरै पछि मात्र अरबीहरूले प्रिन्टिङ प्रेसलाई अँगालेको देखिन्छ ।

**प्रिन्टिङ प्रेसले पारेको प्रभाव ?**

युरोपेली इतिहासमा मध्ययुगलाई अन्धकारको युग मानिन्छ । अन्धकारको युगमा प्रिन्टिङ प्रेसको उदयले नयाँ किसिमको संसार गढ्न मद्दत गर्यो । प्रिन्टिङ प्रेसको उदय र किताबको व्यापक प्रचारप्रसारका कारण किताबको मूल्य घट्न थाल्यो । घट्दो मूल्यका कारण किताब पढ्नेहरूको संख्या पनि बढ्न थाल्यो ।

किताब छापिन सरल हुन थालेपछि ज्ञानको सहजता पनि बढ्न थाल्यो । पुराना कुराको खोजी बढ्न थाल्यो । शास्त्रीय ज्ञानले नयाँ अर्थ बोकेर आउन थाल्यो । यसपछि नै पुनर्जागरणको युग शुरू भएको हो । एक किसिमले भन्ने हो भने पुनर्जागरणको युगमा किताब र प्रिन्टिङ प्रेसले ठूलो भूमिका खेल्यो । धार्मिक शास्त्रका ज्ञाता मार्टिन लुथरको क्याथोलिक धर्मको आलोचना र उनको ९५ थेसिस नामक पुस्तक त्यो बेला रातारात चर्चित बन्न पुग्यो । सन् १५१७ मा त्यो किताब छापिएपछि नै क्रिश्चियनहरूको नयाँ सम्प्रदाय प्रोटेस्टेन्ट जन्मन पुग्यो । यति मात्र होइन, ज्ञानविज्ञानको खोजी, तिनको आलोचना लगायतका अन्य पुस्तकहरू पनि क्रमशः प्रकाशन हुन थाल्यो र वैज्ञानिक क्रान्तिको समय शुरू भयो ।

यसरी गटेनबर्गको प्रेसले पश्चिमा मुलुकमा सूचना क्रान्ति ल्याइदियो । अहिले हामी त्यही सूचना क्रान्तिको आधारशिलामा टेकेर नयाँ नयाँ क्रान्ति गरिरहेका छौं ।

# खानेकुरा बिस्तारै खाँदा हुन्छ फाइदा



धेरै मानिस आफूले कसरी खाएको छु भन्ने वास्तै नगरी आफ्नै सुरमा भोजन गर्छन् । तपाईँले पनि मोबाइल फोन चलाउँदै वा टीभी हेर्दै त्यसरी खाना खाने गर्नुभएको हुन सक्छ । तर विज्ञानले भन्छ - तपाईँले ध्यान दिएर बिस्तारै खानुभयो भने त्यसले तपाईँको स्वास्थ्यमा वास्तवमै राम्रो प्रभाव पार्न सक्दछ ।

हामीले खाना खाने गतिले हाम्रो जीवन, पाचन, सन्तुष्टि र तौल व्यवस्थापनदेखि समग्र स्वास्थ्यस्थितिलाई प्रभावित पार्छ ।

**पाचन**

ब्रजिलको यूनिभर्सिटी अफ साओ पाउलोमा कार्यरत पोषणविद् लिभिआ हासेगावा भन्छिन्, “खानेकुरालाई चपाउँदा खाना ससाना टुक्रा बन्छन् र त्यसले खाना पचाउन सहयोग गर्छ । म प्रायः मेरा आमाबुवाले 'पेटको दाँत हुँदैन' भनेर दिने गरेको उपमा सम्झन्छु ।“

“धेरै मात्रामा पेटमा खानेकुरा पुग्यो भने पाचन प्रक्रिया सुस्त हुन्छ र त्यसको प्रभावकारितामा कमी आउँछ ।“

**के क्यालोरी गनेर खाना खानु घातक हुन सक्छ ?**

**सन् २०५० मा हामी के खान्छौँ होला ?**

“त्यसका अतिरिक्त खाना चपाउँदा त्यसले र्‍यालमा पाचनक्रियाका लागि आवश्यक एन्जाइमहरू उत्पादनका लागि सहयोग गर्छ र पोषक तत्त्व सोस्ने क्रियालाई पनि सुधार गर्छ ।“ यदि हामीले राम्ररी नचपाईकन खाना खायौँ भने पेटले धेरै परिश्रम गर्नुपर्छ । त्यसले गर्दा पेट फुल्ने र पचाउने क्रिया निष्क्रिय हुने सम्भावना बढ्छ । “त्यसैले खाना खाएपछि घण्टौँसम्म केही मानिसहरूले पेट फुलेको र खाना नपचेको महसुस गर्छन्,“ उनले भनिन् ।

खाना निल्नुअघि कति पटक चपाउनुपर्छ भन्ने कुनै निश्चित सूत्र छैन । विज्ञहरू सङ्ख्या गन्नुको साटो खाना निल्नुअघि त्यो उपयुक्त प्रकारले गिलो भएको र निल्न सहज भएको निक्र्योल गर्नुपर्ने सुझाव दिन्छन् ।

“त्यसका अतिरिक्त खाना खाने बेलामा टीभी हेर्ने, फोन चलाउने वा धेरै कुराकानी गर्ने जस्ता गतिविधि गर्दै ध्यान अन्यत्र मोड्दा त्यसले नकारात्मक असर पार्न सक्छ । त्यस्ता गतिविधिले थाहै नपाई हामीले धेरै छिटो खाना खान्छौँ र त्योसँगै धेरै वायु पनि भित्र जान्छ । त्यसले गर्दा पेट फुल्ने अवस्था बन्छ ।“

**अतितृप्ति र तौलवृद्धि**

पाचनमा पर्ने प्रभावसँगै खाना कति चपाइन्छ भन्ने कुरा शरीरको तौलवृद्धिसँग पनि जोडिएको छ । “धेरै छिटो खाँदा तीव्र गतिमा ऊर्जा प्राप्त हुने अवस्था बन्छ । त्यसले एक मिनटमा खर्च हुने क्यालोरीको मात्रा पनि धेरै हुन्छ । अनुसन्धानहरूले त्यसरी तीव्र रूपमा ऊर्जा प्राप्त हुने अवस्थाले हामी अधिक खान्छौँ भन्ने देखाएका छन्,“ न्यूयोर्कस्थित कोर्नेल यूनिभर्सिटीको डिभिजन अफ न्यूट्रिशनल साइन्स एन्ड द श्लाइफर फ्यामलीका प्राध्यापक स्यान्डर केर्स्टन भन्छन् ।

**सामाजिक सञ्जालमा देखिने ‘डाइटिङ प्लान’: कति सही कति हानिकारक ?**

उनका अनुसार बिस्तारै खाँदा खाना मुखमा रहने समय अधिक हुन्छ । त्यसले पाचनसम्बन्धी प्रारम्भिक प्रतिक्रिया र होर्मोन निष्कासन प्रक्रियालाई वृद्धि गर्छ । उनले भने, “अघाएको महसुस गराउने होर्मोन निष्कासन गर्न लागि मस्तिष्कलाई केही समय लाग्छ । त्यसैले तीव्र गतिमा खाना खाने व्यक्तिले आफूलाई आवश्यक पर्नेभन्दा धेरै खानेकुरा खपत गर्छन् किनभने उनीहरूको शरीरले अघाएको जानकारी दिने सूचना मस्तिष्कसम्म पुर्‍याउनै समय लाग्छ ।“ त्यसको नतिजा भनेको अतिरिक्त क्यालोरी उत्पन्न हुनु हो र अन्ततः त्यो शरीरमा थुप्रिने बोसो बन्छ ।

**स्वास्थ्यमा दीर्घकालीन समस्या**

छिटोछिटो खाँदा अमिलो पानी आउने र 'ग्यास्ट्राइटिस'जस्ता पाचनसम्बन्धी समस्याहरूलाई थप बल्झाउन सक्छ । अमिलो पानी आउने सम्भावना भएका व्यक्तिहरूले छिटोछिटो खानेकुरा खाए भने उनीहरूमा देखिने त्यस्तो लक्षण अझ बढ्ने देखिएको छ ।

“अर्को महत्त्वपूर्ण विषय भनेको पेटको 'माइक्रोबायोटा'मा हुने असर पनि हो । पेटमा व्यापक मात्रामा खानेकुरा पुग्दा पेटमा हुने ब्याक्टेरियाको सन्तुलनलाई बिग्रिन्छ र सम्पूर्ण पाचन प्रणालीलाई नै असर पुग्छ,“ हासेगावा भन्छिन् ।

उनी अन्य अस्वस्थकर बानीसँगै छिटोछिटो खाना खाँदा विभिन्न स्वास्थ्य समस्याहरू उत्पन्न हुन सक्ने बताउँछिन् ।

त्यस्ता स्वास्थ्य समस्याहरूमा मोटोपन, टाइप टू मधुमेह, कलेजोमा बोसो जम्ने समस्या, मुटुरोग, उच्च रक्तचाप, केही प्रकारका क्यान्सर आदि पर्छन् ।

**खाना कसरी बिस्तारै खाने**

हासेवागा खाने क्रियाको गति कम गर्न हरेक गाँसको बीचमा आफ्ना काँटाचम्चा केही समय प्लेटमा राख्ने गर्दा खाना खाने गति घटाउन सकिने सुझाउँछिन् । हातैले खाना खाने व्यक्तिहरूले पनि केही समय हात बिसाउँदा उपयुक्त हुन्छ । “तपाईँ लगातार काँटाचम्चा समातिराख्ने काम नगर्नुहोस् । त्यसो गर्दा खाना मज्जाले पेटसम्म नपुग्दै तपाईँ लगातार खाइरहेको हुन सक्नुहुन्छ,“ उनी भन्छिन् ।

उनी एक गाँस खाएपछि काँटाचम्चा प्लेटमा राख्ने अनि फेरि बिस्तारै उठाएर खाने गर्दा त्यसले चपाउने थप समय पाइने बताउँछिन् । उनी खानेकुरालाई एकदमै नरम र गिलो नबन्दासम्म चपाउन सुझाव दिन्छिन् ।

उनी भन्छिन्, “खानेकुरा गिलो बन्दा तपाईँलाई मज्जाले चपाउनुभएको छ भन्ने सङ्केत मिल्छ भने तपाईँको खाना खाने गति पनि कम हुन्छ ।“ उनका अनुसार खाना खाने बेलामा अन्य गतिविधि गर्दा त्यसले पनि खानाको गति बढाउने भएकाले त्यस्ता गतिविधि गर्नु हुँदैन । बिबिसी नेपाली सेवा

# १२ वर्षे हलचोक आकाश भैरव जात्रा : सांस्कृतिक महत्व उच्च, तर प्रचार सुस्त !



काठमाडौं । विश्व सम्पदा सूचीमा सूचीकृत स्वयम्भू, त्यस क्षेत्र वरपर चल्ने जात्रापर्वबारे जोकोही जानकार नै छन् । तर, स्वयम्भू चोकदेखि चार किलोमिटर पश्चिमतर्फ रहेको हलचोक आकाश भैरव मन्दिर क्षेत्रमा चल्ने जात्रापर्वबारे धेरैजना अनविज्ञ हुन सक्छन् । त्यही हल्चोक क्षेत्र अचेल उल्लासमय बनेको छ । १२ वर्षपछि जुरेको आकाश भैरव जात्राका कारण आकाश भैरव मन्दिर रंगरोगन गरेर चिटिक्क पारिएको छ । बिहान-साँझ मात्र पूजा हुने मन्दिरमा दिउँसोसमेत मानिसको आवतजावत बढेको छ । रंगीबिरंगी लुगा र मुकुट लगाएका मानिसहरूको आवतजावत हरेक दिन देखिने गरेको छ ।

मन्दिरनजिकै रहेको आकाश भैरव द्यःछे (देवी देवता राखिने घर)मा पनि बिहानैदेखि मानिसको जमघट बढेको छ । हल्चोक पर्वमय भएको छ । १ वैशाखबाट सुरु भएको आकाश भैरवको १२ वर्षे जात्रा (सवः भग्गु)ले हल्चोक क्षेत्र उल्लासमय बनेको छ । नेवाः समुदायको पुतुवार जातिले सञ्चालन हुने जात्रा अवलोकन गर्ने मानिसको सहभागिता पनि उत्तिकै छ ।

राष्ट्रपति रामचन्द्र पौडेलले १ वैशाखमा पूजा र अवलोकन गरेर जात्रा सुरु भएको थियो । सोही दिन हल्चोकमा १० देवीदेवताको नाच देखाइएको थियो । जात्राको प्रचारप्रसार संयोजक नृपेन्द्रलाल श्रेष्ठका अनुसार नाच सकिएपछि हल्चोकको पुतुवार बस्ती परिक्रमा गरिएको थियो । जात्राको पहिलो दिन र अन्तिम दिन हल्चोक क्षेत्रमा देवीदेवताको नाच देखाइन्छ । 'दोस्रो दिन गुठियारहरूले मुकुट, गरगहना र पोसाक तामाको सन्दुकमा राखेर हल्चोकबाट काठमाडौं महानगरपालिका-१८ वडास्थित ताम्सिपाखामा ल्याएर जात्रा सञ्चालन गरिएको छ । ताम्सिपाखामा जात्रा सकिएपछि फेरि हल्चोकमै लगिन्छ । यस्तै, गतिविधि महिना दिनसम्म चल्छ,' श्रेष्ठले भने ।

२ वैशाखमै ताम्सिपाखाबाट हनुमानढोकास्थित कालभैरव मन्दिर अगाडि इन्द्रजात्रामा यःसिं (लिंगों)उठाउने स्थानमा गुठीबाट पञ्चबलिसहितको पूजाआजा गरिएको छ । ३ वैशाखमा केलटोलस्थित मच्छिन्द्र क्लब, प्रदिप्त पुस्तकालय र केलटोल नाट्येश्वर डबली व्यवस्थापन समितिको संयुक्त आयोजनामा नाच देखाएको हलचोक आकाश भैरव समाजका अध्यक्ष शेरबहादुर पुतुवारले बताए । 'पुतुवार समुदायले सञ्चालन गर्ने यो जात्रा १ वैशाखमा राष्ट्र प्रमुखले पूजा र अवलोकन गरेर सुरु भयो । त्यसपछि पनि विभिन्न कार्यक्रम भइरहेका छन्,' पुतुवारले भने । हरेक वर्ष इन्द्रजात्राका अवसरमा भैरवको जात्रा तथा नृत्य प्रदर्शन हुने गर्छ भने प्रत्येक १२ वर्षमा एकपटक हल्चोक आकाश भैरवको १० देवदेवीसहितको जात्रा सञ्चालन गरिन्छ । १२ वर्षे जात्रा वैशाख महिनाभर सञ्चालन हुन्छ ।

### यी ठाउँमा देखाइनेछ नाच

विभिन्न ठाउँमा नाच देखाउने क्रममा ६ वैशाखमा मरु डबलीमा मरुत्वाः पुचःको आयोजनामा नाच प्रदर्शन हुन्छ । ११ वैशाखमा असन डबलीमा असन सेवा समितिको आयोजनामा, १२ वैशाखमा दमाईं टोलमा काठमाडौं महानगरपालिका-१९ वडाको आयोजनामा, १३ वैशाखमा वतु, चिकंअतमा राजु डंगोलको संयोजकत्वमा नाच सञ्चालन हुनेछ । यस्तै, १८ वैशाखमा न्यतपाःच्वमा महानगरको १८ वडाको आयोजनामा, १९ वैशाखमा पहिको त्वाः, खुसिबुँमा (पहिको युवा क्लबको आयोजनामा), २० वैशाखमा ब्रह्मटोलमा, २१ वैशाखमा खुसिबुँमा, २५ वैशाखमा बहती (सोह्रखुट्टे)मा कुमारी क्लबको आयोजनामा, २७ वैशाखमा न्योखामा रविकृष्ण श्रेष्ठको संयोजनमा र ३१ वैशाखमा ताम्सिपाखा, डल्लु चोक र डल्लु चौतारामा नाच प्रदर्शन गरिनेछ । एक दिनमा एक ठाउँमा मात्र नाच प्रदर्शन तथा पूजा ग्रहण गर्ने हल्चोक आकाश भैरव आफ्नो टोल-छिमेकमा आमन्त्रण गर्न चाहनेले सम्पर्क गरी सहयोग गर्नसमेत आह्वान गरिएको छ । आमन्त्रण गर्न चाहनेले पूजा सामग्रीका साथमा चढाउन चाहने सामग्री देवगण र बाजागाजासहितका लागि २५ भाग सामग्री तयार गर्नुपर्छ । पञ्चबलि पूजा आयोजकको स्वेच्छा हो ।

### एक हजार वर्षअघि सुरु भएको जात्रा

हलचोक आकाश भैरवलाई काठमाडौंका नेवाः समुदायले सवःद्य र सवःभकु (तीन देवता आकाश, चण्डी र कुमारी) पनि भन्ने गरेका छन् । एक हजार वर्षअघिदेखि जात्रा सुरु भएको मानिन्छ । अर्थात्, नेपाल संवत् १०७ मा राजा गुणकामदेवले जात्रा सञ्चालन सुरु गरेका थिए । देवमाला वंशावलीअनुसार राजा गुणकामदेवको सपनामा आएर महालक्ष्मी देवीले दर्शन दिएको जनविश्वास छ । महालक्ष्मी देवीको आदेशबमोजिम राज्यलाई शत्रुको भयबाट मुक्त गर्न हल्चोकमा आकाश भैरवसहित विभिन्न देवता तान्त्रिक विधिबाट उत्पन्न गरेका थिए । गुणकामदेवले यँ (काठमाडौं) रक्षा गर्नका निम्ति चारैतर्फ अष्टमातृका स्थापनासँगै भैरव पनि स्थापना गरेको किंवदन्ती रहेको श्रेष्ठले बताए । यस जात्राका लागि तेजबहादुर चित्रकारले ०२८ सालदेखि मुकुट बनाउँदै आएका छन् । उनले ०३४, ०४६, ०५८, ०७० र ०८१ गरी हालसम्म पाँचपटक मुकुट बनाइसकेका छन् ।

जात्राबारे खासै अध्ययन अनुसन्धान नभए पनि आकाश भैरव गुठी नाइके सागर पुतुवारका अनुसार जनताको रक्षा र राजाको मंगल होस् भनेर सुरु भएको हो । 'यो जात्रा निकै महत्वपूर्ण छ । पूजाआजा गरेर मनाइने यो नाच हाम्रो पहिचान हो । एक हजार वर्षदेखि चलिआएको जात्रा हाम्रो गौरव हो । खासै प्रचारप्रसार हुन नसके पनि काठमाडौंको कोर एरियामा नाच देखाउन जानैपर्छ । महत्वपूर्ण स्थानमा नाच प्रदर्शन गर्नैपर्छ,' उनले भने, 'आकाश भैरव साक्षात् भगवान् हुन् । मान्छेलाई हातखुट्टा दुखेमा, टाउको दुखेमा यहाँ पूजापाठ गरे ठिक हुन्छ । यहाँ भाकल गरेमा मनोकांक्षा पूरा हुने जनविश्वास पनि छ ।'

### दुई देवी चोरी भएपछि १० देवीदेवताको मात्रै नाच

१२ वर्षे आकाश भैरव जात्राको सुरुवाती दिनमा १२ देवीदेवताको नाच देखाइन्थ्यो । करिब दुई सय वर्षअगाडि दुई देवी चोरिएपछि १० देवगणको मात्र नाच देखाउने गरिएको छ । आकाश भैरव गुठी नाइके सागर पुतुवारका अनुसार सुरुमा द्यःछे एक तल्लाको मात्र थियो । एक तल्ले उक्त घरको छाना छ्वाली र परालको थियो । पूजाआजाको क्रममा बिहान र बेलुका बत्ती बाल्दा बत्तीबाट आगलागी भयो । द्यःछेमा राखिएको मुकुट जल्यो । देवीदेवता तितरवितर भए । त्यसपछि द्यःछे पुनर्निर्माणका लागि हल्चोक क्षेत्रमा डकर्मी पाइएन । त्यसैले कीर्तिपुरबाट डकर्मी बोलाएर पुनर्निर्माण भयो । पुनर्निर्माणकै क्रममा द्यःछेबाट शिघ्रिनी, ब्यागनी दुई देवी हराए । ती दुई देवी सुनजस्तै चम्किला र राम्रा थिए । दुई देवी हराएपछि १० देवीको मात्र नाच देखाइन थालियो ।

'त्यतिवेला यो ठाउँ दुर्गम थियो । हराएको देवताको भजन, बाजाको बोल, नाचबारे कसैलाई हेक्का भएन । अहिलेजस्तो प्रविधिको जमाना थिएन । मुकुट कस्तो थियो भन्ने समेत जानकारी भएन,' उनले भने, 'यहाँ पूजा गर्दा कीर्तिपुरमा देवी राखिएको घरै हल्लिन्छ भन्ने विश्वास छ । भगवान् भेटिएमा लसकुस (स्वागत)गरेरै ल्याउने हो । हामी अझै खोजबिनमै छौं ।'

यो नाच प्रदर्शन अगाडि पुतुवार समुदायका गुथियारहरू १ वैशाखमा नागार्जुनको छहारे र आकाशदेवी स्थानमा गई पूजा गर्छन् । श्रेष्ठका अनुसार पूजाका क्रममा देवशक्ति हावाको माध्यमबाट झ्याली, बाजा र चिराखमध्ये एउटामा प्रवेश गर्दछ भने ती सामग्रीमा विशेष ध्यान दिई बसेको हुन्छ । तीमध्ये कुनै एकमा शक्ति प्रवेश भएको आभास भएपछि त्यसलाई कपडाले छोपछाप पारी देवघरमा लगिन्छ । यसपछि देवघरमा विशेष पूजा गरी सोही दिन बसा लायेगु (देवताहरूलाई भुइँमा टेकाउन नहुने भएकाले सेतो कपडा बिछ्याउने कार्य) गरेर १० देवदेवीलाई हल्चोक परिक्रमा गराउने प्रचलन छ ।

१२ वर्षे जात्राका क्रममा हल्चोक आकाश भैरवको देवगणका रूपमा १० देवदेवीको नाच प्रदर्शन गरिन्छ । जसमा चण्डी, कुमारी, हल्चोक आकाश भैरव, गंगा, महादेव, पार्वती, आकाशदेवी, बाराही, महाकाली र दक्षिणकाली देवी रहेका छन् ।

जात्रा सुरु हुनुभन्दा अगाडि नै रौनक सुरु हुने १२ वर्षे जात्राका लागि फागुनदेखि नै देउता बन्न नृत्य प्रशिक्षण दिने गरिन्छ । देवगण बन्नका लागि पुतुवार समुदायकै अविवाहित पुरुष हुनुपर्छ । १ चैतमा मुकुट बनाउन चित्रकारकहाँ लगिन्छ । चित्रकारले विधि पूरा गरेर पूजा गरी मुकुट बनाउन सुरु गरेको एक महिनापछि हस्तान्तरण हुन्छ । ३१ चैतमा गुथियारलाई मुकुट हस्तान्तरण गर्ने गरिन्छ । पुतुवार समुदायका ९० घर गुठियारले चलाउँदै आएको यो जात्राबारे युवापुस्ता पनि सजग हुन थालेको सागर पुतुवारले बताए । 'यो जात्रामा धेरै युवाको सहभागिता हुने गरेको छ । आफ्नो संस्कृति र सम्पदा बचाउनुपर्छ भन्ने उनीहरूले बुझ्न थालेका छन् । यो ठाउँमा हुने आकाश भैरवको जात्राबारे विस्तारै धेरै मानिसमा जानकारी हुन थालेको छ,' उनले भने ।

### जात्रा सञ्चालन गर्न धौधौ

गुठीका अनुसार जात्रा सम्पन्न गर्न ६० देखि ६५ लाख खर्च लाग्छ । जात्राका लागि काठमाडौं महानगरपालिकाबाट २५ लाख ४० हजार, नागार्जुन नगरपालिकाबाट १३ लाख ३० हजार बजेट प्राप्त भएको छ । बाँकी भक्तजनबाट करिब ६ लाख गरी ४४ लाख ७० हजार संकलन भएको छ । यो रकमले महिनाभर जात्रा सञ्चालन गर्न धौधौ हुने गरेको छ । गुठीका नाइके सागर पुतुवारले इन्द्रजात्राको उदाहरण दिँदै हल्चोक भैरवको जात्रालाई सरकारले प्राथमिकतामा नराखेको आरोप लगाए । 'सम्पदा बचाउनुपर्छ । संस्कृति बचाउनुपर्छ भनेर सबैले भाषण गर्नुहुन्छ, तर काम हुँदैन । यस्तै, सम्पदा र संस्कृतिका कारण नेपाल चिनिएको छ । मठमन्दिर, विभिन्न समुदायको संस्कृतिले नेपाल चिनिएको हो भन्ने ख्याल राखिँदैन,' पुतुवारले भने, 'केन्द्र सरकारले बजेट दिँदैन । इन्द्रजात्राजत्तिकै महत्व भएको जात्राको अन्तर्राष्ट्रियकरण गर्न ध्यान दिँदैन ।' आकाश भैरवको नाममा आठ रोपनी जग्गा भए पनि यो जग्गा गुठीले भोगचलन गर्न पाएको छैन । करिब २० वर्षदेखि मोहीले जग्गा कब्जा गरेर राखेको र उक्त जग्गाको मुद्दा अझै नटुंगिएको पुतुवारले बताए । मन्दिरमा पूजाआजा र सरसफाइ गर्नसमेत पारिश्रमिकको व्यवस्था गरिएको छैन । गत वर्षदेखि भने प्रदेश सरकारले दिएको दुई लाखबाट रुपैयाँबाट मासिक पाँच हजार रुपैयाँको भत्तास्वरूप सहयोग गरिरहेको गुठीले बताएको छ ।

## रियलको जितले उपाधि दौड रोचक मोडमा

एजेन्सी । फेडेरिको भाल्भेर्देले इन्ज्युरी समयमा गोल गरेपछि एथलेटिक क्लबलाई १-० ले हराउँदै रियल म्याड्रिडले ला लिगा उपाधि होडलाई कायम राखेको छ । इन्ज्युरी समयको तेस्रो मिनेटमा भाल्भेर्देले आफ्नो बाँया हाफ-भली मार्फत गोल गर्दै टोलीलाई जित दिलाएका थिए ।

यो उनको जारी सिजनमा छैटौं लिग गोल हो । डिसेम्बर सेभियाविरुद्ध गोल गरेपछि उनले पहिलो पटक गोल गरेका हुन् । रियल फ्रान्सेली स्ट्राइकर किलियन एम्बाप्पे बिना मैदानमा उत्रेको थियो । एम्बाप्पे अलाभेसविरुद्ध १-० को जितमा रातो कार्ड पाएपछि एक खेलको प्रतिबन्धमा थिए ।

जितपछि रियलले तालिकाको शिर्षस्थानमा रहेका बार्सिलोनासँगको अंक दूरीलाई पुनः ४ मा झारेको छ । सिजन समाप्त हुन अब मात्र ६ खेल बाँकी रहेको छ । शनिवार बार्सिलोनाले इन्ज्युरी समयमा पुगेर जित निकालेको थियो । एक समय बार्सिलोना ३-१ ले पछि परेको थियो । निर्धारित समयमा बराबरी गर्न सफल बार्सिलोनाका लागि इन्ज्युरी समयमा राफिन्हाले पेनाल्टी मार्फत गोल गरेपछि बार्सिलोनालाई ४-३ ले विजयी भएको थियो ।

च्याम्पियन्स लिगको साविक विजेता टोली रियल आर्सनलसँग गत साता क्वाटरफाइनलमा समग्रमा ५-१ को हार भोग्दै प्रतियोगिताबाट बाहिरिएको थियो । टोलीले लिग उपाधि जोगाउने आशा भने कायम राखेको छ ।

ला लिगाका अन्य खेलमा ओसासुनाले भालाडोलिडलाई ३-२ ले हरायो । भिल्लारियल र रियल सोसिडाडले २-२ तथा सेभिल्ला र अल्भेसले १-१ को बराबरी खेलेका छन् ।

## क्रिकेट टोली छनोटका लागि "कोर क्याम्प"

काठमाडौं । नेपाल क्रिकेट संघ (क्यान) ले आइसिसी क्रिकेट विश्वकप लिग टुको स्कटल्याण्ड सिरिजको लागि खेलाडी छनौट प्रक्रिया 'द कोर क्याम्प' बाट शुरु गर्ने भएको छ । प्रधानमन्त्री कप क्रिकेट प्रतियोगिताबाट क्यानले कुल ५२ खेलाडी छनोट गरेको थियो । जसमा यु १९ राष्ट्रिय टोलीका खेलाडी पनि सामेल छन् ।

द कोर क्याम्पको लागि ५२ खेलाडीलाई निलो, हरियो, रातो र पहेंलो टिममा विभाजन गरिएको छ । यी ४ टोलीबीच मुलपानीको माथिल्लो र तल्लो मैदानमा प्रतिस्पर्धा हुनेछ । वैशाख १३ देखि २० गतेसम्म प्रतियोगिता हुनेछ ।

वैशाख १२ गतेबाट नवनियुक्त अष्ट्रेलियन प्रशिक्षक स्टुआर्ट ल नेपाल आइपुग्नेछन् । प्रशिक्षक स्टुआर्ट र खेलाडी छनोट समितिले यो प्रतियोगिता पछि बन्द प्रशिक्षणको लागि खेलाडी छनोट गर्ने क्यानका प्रवक्ता छुम्पी लामाले जानकारी दिए ।

निलो टिम- रोहित कुमार पौडेल (कप्तान), प्रज्वल थापा (विकेटकिपर), देव खनाल, अनिल कुमार साह (विकेटकिपर), शाकिब हक, सुर्य तामाङ, सन्दीप जोरा, कुशल मल्ल, गुलशन कुमार झा, हेमन्त धामी, करण के.सी., दिपेश प्रसाद कँडेल, युवराज खत्री

हरियो टिम- आसिफ शेख (कप्तान/विकेटकिपर), सोमपाल कामी, ईशान पाण्डे, अर्जुन कुमाल, आकाश त्रिपाठी, सागर ढकाल, दिलीप नाथ (विकेटकिपर), बिबेक कुमार यादव, पवन साराफ, रिजन ढकाल, शेर मल्ला, राशिद खान, सन्तोष यादव

रातो टिम- सन्दीप लामिछाने (कप्तान), अर्जुन साउद (विकेटकिपर), त्रितराज दास, भीम शार्की, शुभ कंषकार, शहाब आलम, बशिर अहमद, आरिफ शेख, लोकेश बम, नन्दन यादव, आकाश चन्द, प्रतीश जी.सी., नरेन भट्ट

पहेंलो टिम- दिपेन्द्र सिंह ऐरी (कप्तान), विनोद भण्डारी (विकेटकिपर), मयन यादव, कुशल भुर्तेल, सुजन थापलिया, ललित नारायण राजवंशी, अर्जुन घर्ती (विकेटकिपर), किरण ठगुन्ना, अविनाश बोहोरा, रूपेश कुमार सिंह, कमल सिंह ऐरी, विशाल पटेल, दिपेन्द्र रावत ।

## १४ वर्ष २३ दिनमा आईपीएलः पहिलो बलमै छक्का

काठमाडौं । भारतमा जारी इन्डियन प्रिमियर लिग (आईपीएल) प्रतियोगितामा दैनिक केही न केही रेकर्ड बन्ने गर्छन् । तर शनिबार भएको खेलमा राजस्थान रोयल्सका वैभव सूर्यवंशीले भने दुलर्भ रेकर्ड बनाएका छन् । उनले सबै भन्दा कम उमेरमा आईपीएल खेलेर इतिहास कायम गरेका हुन् ।

लखनउ सुपर जायन्ट्सविरुद्ध शनिबार भएको खेलमा उनी इम्प्याक्ट खेलाडीको रूपमा ब्याटिङ गर्न क्रिजमा पुगेका थिए । कप्तान सञ्जु सामसन घाइते भएपछि टोलीमा मौका पाएका सूर्यवंशीले लखनउविरुद्ध यशस्वी जयसवालसँग ओपनिङ ब्याटरको रुपमा मौका पाए । उनले आईपीएलको सुरुवात मै छक्का प्रहार गरेर गरेका छन् । उनले पहिलो बलमा शार्दूल ठाकुरको बलमा छक्का हिर्काएका हुन् । २० बलमा तीन छक्का र दुई चौकाको मद्दतमा ३४ रन जोडेका उनी आइडन म्याक्रमको बलमा लखनउका कप्तान ऋषभ पन्तबाट स्टम्पिङ भए । सूर्यवंशीले १४ वर्ष २३ दिनको उमेरमा पहिले आईपीएल खेल खेलेका हुन् । १३ वर्षको उमेरमा अस्ट्रेलिया यु-१९ सँगको खेलमा ५८ बलमा शतक प्रहार गरेपछि उनी चर्चामा आएका थिए । उनी एक करोड बढी भारतीय रुपियाँमा यस सिजन राजस्थानमा आबद्ध भएका हुन् ।

यसअघि कान्छो खेलाडीको कीर्तिमान प्रायस राय बर्मनको नाममा थियो । सन् २०१९ को सिजनमा उनले रोयल च्यालेन्जर बंगलोरुको तर्फबाट १६ वर्ष १५७ दिनमा पहिलो खेल खेलेका थिए ।

## बर्तमान....

परिवर्तनको लहरले संवैधानिक राजतन्त्रसहितको बहुदलीय व्यवस्थाको शुरूआत भयो । अभिव्यक्ति स्वतन्त्रता, स्वतन्त्र सञ्चार क्षेत्र, दलीय प्रणाली र सार्वभौम शक्ति जनतामा रहेको अवस्था आयो । बहुदलको सबल पक्षभन्दा दुर्बल पक्षको बढोत्तरी हुन थालेपछि सशस्त्र द्वन्द्वको भूमिगत आन्दोलन शुरू भयो । वि.सं. २०७२ मा गणतन्त्र, धर्मनिरपेक्षता, संघीय शासन प्रणाली, समावेशी शासन प्रणालीको मुख्य मुद्दा सम्बोधन हुन पुग्यो ।

नेपालमा व्यवस्था परिवर्तन भयो, अवस्था परिवर्तन भएन भन्ने मुख्य मुद्दा अहिले सडकमा छ । वि.सं. २०४६ पछि विद्यालय र विश्वविद्यालयको स्थापना तथा दक्ष जनशक्ति उत्पादन, सडक सञ्जालको वृद्धि, स्वास्थ्यमा भएका प्रगति, प्रतिव्यक्ति आयमा वृद्धि, मातृ र शिशु मृत्युदरमा भएको सुधार, साक्षरता दरको प्रगति, समावेशिताको अवसर, उद्योग र व्यापारका पूर्वाधारसहित सिँचाइ, विमानस्थलजस्ता महत्वपूर्ण पूर्वाधारको निर्माण र अन्तर्राष्ट्रिय सम्बन्ध लगायतका विषयमा भएका प्रगतिको संख्यात्मक विवरण जनताले बुझ्नेगरी सार्वजनिकीकरण नहुँदा जनताले सत्यता थाहा पाउन सकेनन् ।

जनआक्रोशको आत्मसमीक्षा गरी यक्ष प्रश्नको जवाफ जनतालाई दिनैपर्ने हुन्छ । शासन प्रणालीमा नवीनतम सोचसहित अन्तर्राष्ट्रिय असल अभ्यासको पालना र जीवनस्तर सुधार गर्न जनता उत्साहित बनाई जनपरिचालनजस्ता विषयमा राज्य सक्रिय हुनुपर्छ ।

उत्पादनतर्फ विदेशीमित्र राष्ट्रले आर्थिक उन्नति र रोजगारी वृद्धि गर्न सहयोग स्वरूप स्थापित उद्योगहरुको अवस्था कहालिलाग्दो नै देखिएको र उक्त विषय शासकीय प्रभावकारिताको मूल्याङ्कनमा नाजुक नै रहेको पाइन्छ । यसलाई दलीय व्यवस्थाको भद्रगोल व्यवस्थापनका रूपमा चर्चा गरिने गरेको छ । आन्तरिक अवसर बढाउन नसक्दा र दलीय व्यवस्थाले युवा पुस्तालाई प्रोत्साहन गर्न नसक्दा पलायन हुन बाध्य भएको विषय पनि चर्चामा छ । भ्रष्टाचार र अनियमितताको आरोप माथिल्लो तहसम्म पुग्ने गरेको र कारबाही नहुने अवस्थाले पनि जनआक्रोश बढेको देखिन्छ । राज्य संयन्त्रको सेवा प्रवाह समयसापेक्ष हुन नसक्नु, सेवा लिन जाँदा सास्ती भोग्नु परेका घटनाले पनि शासन प्रणालीप्रति नकारात्मक धारणा शुरू भएको छ । कानूनी शासन लोकतन्त्रको मुहार हो, तर सानालाई ऐन र ठूलालाई चैन भन्ने अवधारणा विकास भएको छ र राज्यका महत्त्वपूर्ण नियुक्तिमा परिवारवाद र लगानीवादको वर्चस्व रहेको आरोप छ ।

राजनीति महंगो भयो, नेतृत्व तहको जीवनस्तरमा समेत प्रश्नहरू आए, राजनीतिमा लाग्नेलाई कानूनी दायरामा ल्याउन नसकिएका घटना र राज्यसंयन्त्र जनमुखी नभई राजनीतिक प्रभावमा देखिँदा सुशासनमा चुनौतीहरू बढ्दै गएको छ । राष्ट्रका सम्मानित पदमा रहँदा र कार्यकालपछि राज्यका सुविधाहरूतर्फ पनि सकारात्मक अवस्था ल्याउन सकिएन । जनपृष्ठपोषणको कमजोर अवस्थाले जनता र राजनीति एवं शासन व्यवस्थाको प्रभावकारितामा ह्रास हुन पुग्यो । भ्रष्टाचार र अनियमितताका विषयहरूको न्यूनीकरण गर्ने प्रयास कमजोर देखियो । नागरिकलाई उद्यमी बनाउने र शिक्षा सीपबाट दक्ष बनाई आर्थिक रूपमा बलियो बनाउने काममा उत्साह ल्याउन सकिएन ।

सञ्चार माध्यमको डिजिटल प्लेटफर्मको सकारात्मक पक्षभन्दा नकारात्मकताले दलीय व्यवस्था विरुद्धका क्रियाकलापले महत्त्व पाए । स्वतन्त्र सञ्चार माध्यम र अभिव्यक्ति स्वतन्त्रताको विषयले समाजको उज्यालो पक्षको अभियान कमजोर देखियो । आर्थिक आधारहरूको सबलीकरण गर्न नसक्दा परनिर्भरता बढ्दै गयो ।

कमजोर सरकार, कानूनी शासनको गिर्दो अवस्था, भ्रष्टाचार र अनियमितताको बढ्दो प्रवृत्ति, शासन प्रणाली र जनताबीचको सम्बन्धको अन्तर बढ्दो, क्षमताको कदर नहुने अवस्था, परिवारवाद र आफ्नो मान्छे खोज्ने प्रवृत्ति, शासन सञ्चालनमा उच्च तहमा हुने पदाधिकारीको त्यागभन्दा लिने प्रवृत्तिमा जोड, शासन प्रणालीमा नवीनतम् खोज गर्ने, जनताको जीवनस्तर सुधार गर्ने, उद्यमी नागरिक बनाउनेजस्ता विषयले महत्व पाएन र शासन प्रणालीप्रति क्रमशः आक्रोश बढ्दै गएको छ ।

जनतामा शासकीय नेतृत्वप्रति विश्वास र भरोसा गर्ने वातावरण बन्न कठिन हुँदै गएको देखिएको छ । अहिले सडकमा आएको आक्रोशका बीच पहिला आफैंतिर फर्केर हेरौं । आफूलगायत शासकीय समूहको आत्मसमीक्षा गरौं । कमजोरी तुरुन्त सुधार गरौं । आफ्नो सहयोगी समूहको क्रियाकलापमा निगरानी गरौं । दलमा स्वच्छता, पारदर्शी नवीनतम् अवधारणासहितको जिम्मेवारी बोध र जनताप्रति जवाफदेही बनौं । हाम्रो मान्छे होइन, राम्रो मान्छे बन्ने आधार तय गरौं । सडकमा आएका आक्रोशको मिहीन ढंगले आत्मसमीक्षा गरौं ।

सर्वस्वीकार्य व्यवहार प्रदर्शन गरी जनताको केन्द्रबिन्दुमा राजनीति र जनअनुमोदित शासकीय प्रणालीबाट जनताप्रति जवाफदेही हुनुपर्नेको विकल्प छैन । जनआक्रोशको आत्मसमीक्षा गरी शासन प्रणालीमा नवीनतम् सोचसहित अन्तर्राष्ट्रिय असल अभ्यासको पालना र जीवनस्तर सुधार गर्न जनता उत्साहित बनाई जनपरिचालनजस्ता विषयमा राज्य सक्रिय हुनुपर्छ ।

## नेवाः...

अधिकारसहित विशेषाधिकार भए मात्र नेवाः समुदायको भाग्य र भविष्य उज्ज्वल हुने विश्वास व्यक्त गर्दै नेता श्रेष्ठले पार्टी अध्यक्ष पुष्पकमल दाहाल (प्रचण्ड) नेतृत्वको सरकारले जनतामा आशा भर्न सफल भएको बताए । बन्द सत्रमा नेवाः राष्ट्रिय मुक्ति मोर्चाका पूर्व अध्यक्ष तथा पार्टीका केन्द्रीय सचिव हितमान शाक्यले पहिलो संविधानसभाबाटै १४ प्रदेशसहित नेवाः स्वायत्त राज्य स्थापना गर्ने मार्ग खुले पनि संविधानसभा भंग भएकाले सो पूरा नभएको बताए । दोश्रो संविधानसभामा पार्टी फुट भएर तेश्रो शक्तिमा चित्त बुझाउनुपर्दा विगतका प्रतिबद्धता अधुरै रहेको बताए । उनले यथास्थितिवादमा रमाउने पार्टी र उग्रवामपन्थको कारणले पनि नेवाः स्वायत्त राज्य स्थापनामा चुनौति थपिएको स्मरण गर्दै मोर्चा र पार्टीले पहिचानसहितको प्रदेश निर्माणको लागि सबै तहबाट आन्दोलित हुने प्रतिबद्धता व्यक्त गरे ।

सम्मेलनको उद्घाटन भने शनिबार बसन्तपुरमा पूर्व प्रधानमन्त्री समेत रहेका माओवादी केन्द्रका अध्यक्ष प्रचण्डले गरेका थिए । सो अवसरमा अध्यक्ष प्रचण्डले राजनीतिक सम्झौता गर्दा जनसम्बन्ध कमजोर भएको र त्यसको परिणाम पनि राम्रो नआएको उल्लेख गर्दै जनयुद्धको एजेन्डा समातेर आफूहरू आत्मालोचना सहित आफ्नै वर्ग,जाति,समुदाय र जनतातर्फ फर्किएको उद्घोष गरेका थिए । उनले नेवाः शक्तिलाई परिवर्तन सस्थागत गर्न र उत्पीडितहरुको अधिकार रक्षा गर्दै थप अधिकारको लागि अघि बढ्न अभिप्रेरित गरेका थिए ।

## नवौं....

प्रवर्द्धनमा समेत योगदान गरेको बताए । एउटै थलोमा मनोरञ्जनपूर्व वातावरणका बीच उपभोक्ताले धेरै बस्तु तथा सेवा प्राप्त गरी लाभान्वित भएका विश्वास व्यक्त गरे । व्यवसायी र उपभोक्ता एक रथका दुई पाङ्ग्रा भएका प्रष्ट पार्दै नगर प्रमुख थापाले सूर्यविनायक नगरपालिका दुबैको अधिकार रक्षा गर्दै अघि बढ्ने बताए ।

कार्यक्रमका विशेष अतिथि रहेका नेकपा एमाले जिल्ला कमिटि भक्तपुरका अध्यक्ष बचन देउजाले बिगत वर्षमा झैँ यस वर्ष पनि महोत्सवले आफ्नो उद्देश्य पूरा गरेकोमा सन्तोष व्यक्त गर्दै आगामी वर्ष पनि महोत्सवले निरन्तरता पाउने आशाका साथ शुभकामना व्यक्त गरे । उक्त अवसरमा सूर्यविनायक नगरपालिकाकी उपप्रमुख, नगरपालिका वडाध्यक्षहरु, आयोजक संस्थाका पदाधिकारी एवं सदस्यहरु, महोत्सव अवलोकनकर्ता, व्यवसायी र स्थानीयको उपस्थिति रहेको थियो भने ११ दिन सम्म चलेको उक्त महोत्सवमा भएको नृत्य प्रतियोगिताबाट पूर्णिमा बि.क प्रथम हुन सफल भएकी थिइन् । उनलाई प्रमाणपत्र, मेडलसहित रु. ३०,०००।-नगद पुरस्कार दिइएको थियो भने द्वितीय रतिस गिरीलाई प्रमाणपत्र, मेडलसहित रु. २०,०००।- र तृतीय हने सागर लामालाई प्रमाणपत्र, मेडलसहित रु. १०,०००।- नगद पुरस्कार प्रदान गरिएको थियो ।

त्यस्तै कार्यक्रममा सांगितिक क्षेत्रमा ठूलो योगदान दिनुहुने संगीतकार सुवासचन्द्र ढुंगेललाई सम्मान पत्र र नगद रु.५०००।- सहित सम्मान गर्नुको साथै सिद्धिस्मृति भक्तपुर फुटबल क्लबका खेलाडीलाई कदर पत्रसहित सम्मान गरिएको थियो । सल्लाघारीस्थित १०८ रोपनी चौरमा ११ दिन सम्म चलेको महोत्सवमा १ लाख भन्दा बढीले अवलोकन गरेको महोत्सवका संयोजक दिपक थापाले जानकारी दिए । बैशाख ८ गते सोमबार भक्तपुर विशेष सांगीतिक कार्यक्रम भएको सो कार्यक्रममा चर्चित गायक तथा कलाकारहरुको प्रस्तुति रहको थियो । साँझ ४:३० बजेबाट शुरू भएको कार्यक्रमको प्रवेश शुल्क एक सय रूपैयाँ तोकिएको थियो ।

नयाँ वर्षको अवसरमा सञ्चालन भएको नवौं 'भक्तपुर औद्योगिक, साँस्कृतिक, पर्यटन, कृषि तथा व्यापार महोत्सव अन्तर्गत सो विशेष सांगीतिक कार्यक्रम भएको हो । औद्योगिक शान्ति नेपालको आयोजनामा भएको सांगीतिक कार्यक्रममा चर्चीत गायक जी बब र मिस्टर डीलगायतका कलाकार हरुको प्रस्तुति रहको थियो ।

भक्तपुरलाई 'उद्योग, संस्कृति र कृषि' को संगमका रूपमा चिनाउने उद्देश्यका साथ औद्योगिक शान्ति नेपाल संस्था र मध्यपुर ब्वाइजब्याण्डले २०७२ सालदेखि महोत्सव आयोजना गर्दै आइरहेको संस्थाका अध्यक्ष सन्दिप महतले जानकारी दिए ।

## जमिन....

बताए ।

कार्यक्रमका सहभागी अन्य वक्ताहरुले जमिन बाँझो राख्नेलाई कारबाही गर्नुपर्ने आवश्यकता रहेको औंल्याएका थिए । कम्तीमा पनि दुई तीन वर्ष जमिन बाँझे राखे स्थानीय निकाय नगरपालिका, वडाले कृषि कार्य गर्नुपर्ने उनीहरुले बताए । कृषि क्षेत्रमा लगानीअनुसार फाइदा नहुने देखिएपछि कृषि पेसाबाट पलायन हुने अवस्था बढ्दै गएको पाइएको उनीहरुको भनाई हो । कृषिमा श्रम गर्ने युवा शक्तिको पलायन, न्यून उत्पादकत्व, कृषि उत्पादन सामग्रीको कमी, कम नाफामुखी व्यवसाय र अपेक्षित रुपमा सम्मानित पेसाका रुपमा विकसित हुन नसक्नु लगायतका कारण खेतीयोग्य जमिन बाँझो रहेको उनीहरुको भनाई हो ।

'घाटाको व्यापार कसले गर्छ, नेपालमा कृषि क्षेत्र नाफामुखी छैन,' कृषिविज्ञ कुलप्रसाद तिवारले भने, 'लागत अनुसार आम्दानी हुँदैन, यसले खेतीपातीमा आकर्षण घट्दो छ र खेती बाँझो भएको हो ।'

देशभर व्यवसायिक भन्दा निर्वाहमुखी खेती भइरेको छ । यहाँको उत्पादनले भारतको उत्पादनसँग प्रतिस्पार्ध गर्न नसकेर बजार पाउन समस्या हुन्छ । यसले गर्दा किसानहरु निरुत्साहित हुन्छन् । भारतबाट आउने उपजसँग स्वदेशी कृषि उपज प्रतिस्प्रर्धा गर्न सक्दैन ।

कार्यक्रममा तराई क्षेत्रको तुलनामा पहाडी क्षेत्रमा बढी जग्गा बाँझो रहेको जनाएको छ । यसो हुनुमा पहाडी क्षेत्रमा तराई भन्दा कम कृषि क्षेत्रमा अवसर हुनु हो । यस्तै, गाउँ छाडेर सहरमा बस्ने प्रवृत्ति बढ्दै गएको कारण पनि गाउँघरका जमिन बाँझो हुने अवस्थामा पुगेको छ ।

पहाडी र हिमाली क्षेत्रमा खेती गर्नेको संख्या घट्दै गएको छ । कृषिमा जङ्गली जनावरलगायत असिना पानीबाट हुने क्षति बढ्दो छ । गाउँ छाडेर सहरमा बस्ने प्रवृत्ति बढ्दै गएको र गाउँमा अवसर नभएको भन्दै जनशक्ति सहर केन्द्रित भएकाले जमिन बाँझो हुने अवस्थामा पुगेको छ । यसका साथै बाह्रै महिना सिँचाइ सुविधा पुग्ने ३५ प्रतिशत पनि जमिन नभएको, टेक्नोलोजीको सहयोग पुऱ्याउन कठिन, बिउबिजनको सुविधामा समस्या लगायतका कारण पनि जमिन बाँझो रहने गरेको उनीहरुको भनाइ छ ।

कार्यक्रममा नेपाली कांग्रस निकटको नेपाल किसान महासंघका अध्यक्ष गणेश तिमल्सिना, डा सूर्य पौडेल, आयोजक समितिका अध्यक्ष हरिवोल भटराईलगायतले पनि कृषि क्रान्तिमा जोड दिए । भूमि उपयोगका हिसाबले नेपालमा हाल कुल भूभागको करिब २७ प्रतिशत खेतीयोग्य, ३९ दशमलव ६ प्रतिशत वन क्षेत्र, १२ प्रतिशत चरन क्षेत्र, १७ दशमलव २ प्रतिशत हिउँ तथा चट्टान क्षेत्र तथा २ दशमलव ६ प्रतिशत जलक्षेत्र छ ।

## उपभोक्ता....

अनुगमन गर्दैन् । जसका कारण ठूलो राजश्व गुमिरहेको अवस्था छ । बजार अनुगमनका लागि सरकारको उद्योग, वाणिज्य तथा आपूर्ति मन्त्रालय छ । त्यसैगरी, स्थानीय सरकारलाई पनि सो अधिकार दिइएको छ ।

तर, कसैलाई पनि बजार अनुगमनमा चासो छैन् । सरकारको लापरवाहीले व्यापारीहरुमा राजश्व छल्ने मनोबल बढेको हो । कुनै व्यवसायले भ्याट बिल दिँदैनन् । न उपभोक्ताले नै माग्छन् । सामान किनेपछि भ्याट बिल माग्नु जनताको कर्तव्य र अधिकारको कुरा हो । तर, दर्ता नै नभएका पसलहरुले कहाँबाट भ्याट बिल ल्याएर दिऊन् ?

सुन पसलकै कुरा गरौं । एक तोला सुनको लगभग दुई लाख रुपैयाँ पुग्न थालिसक्यो । सुन खरिदकर्तालाई उनीहरुले भ्याट बिलको साटो एउटा सानो चिट दिन्छन् । कानुन मान्ने हो भने व्यापारीले अनिवार्य दर्ता गर्नुपर्छ । कसैले सामान किनेपछि पसलेले बिल दिनैपर्छ । सिंहदरबार पछाडि धेरै पसल छ ।

कानुन व्यवसायीदेखि चिया पसल, मःम पसल, लन्ड्री र ड्राई क्लिनर्स, मासु पसल, मोबाइल पसललगायत दर्जनौं व्यवसाय छ । तर, कुनैको पनि दर्ता छैन् । वडा नम्बर २९ को कार्यालय केही मीनेटको दुरीमा छ । यद्यपि, वडा कार्यालयले अनुगमनमा चासो देखाएको छैन् ।

स्थानीय सरकार कर उठाउन चासो देखाउँदैन् । काठमाडौं महानगर मात्र होइन्, अन्य महानगरपालिकाले पनि कर उठाउनमा कुनै तदारुकता देखाएको छैन् । भक्तपुरको सूर्यविनायक नगरपालिकाभित्र सञ्चालित अधिकांश पसलमध्ये एकाध मात्र दर्ता छ । तर, कसले अनुगमन गर्ने ?

म्हानगरको छेउछाउ नै त्यस्तो हालत छ भने नजर नपुगेको ठाउँमा के होला ? सरकार अनुगमन गर्न नजाने, व्यापारी दर्ता गर्न नआउने । अनि थपिएको छ, राज्यमाथि अनावश्यक आर्थिक भार । काम पनि गर्न नसक्ने, कर पनि उठाउन नसक्ने स्थानीय सरकार किन चाहियो ? फोगट्टेमा जनताले तिरेको कर दुरुपयोग भइरहेको छ ।

म्याद गुजिएको सामानहरु बजारमा छ्याप्छ्याप्ती छ । लुगा होस् या खाद्यान्न त्यसको म्यानुफ्याक्चर मिति लेखिनुपर्छ । ड्यामेज भएका सामान पनि बेचिएको छ । खान अयोग्य सामान पनि धमाधम बेचिरहेका छन् । प्लास्टिकमा प्याक गरेर सामान बेचिरहेका छन्, व्यापारी । बोरामा सामान ल्याउने, पोका पारेर मैनबत्तीले बन्द गरेर बेच्ने ।

त्यसमा केही नै लेखिएको हुँदैन् । व्यापारीले मायाले दिएका हुँदैनन् । दुःखले कमाएको पैसाले किनेको सामान पो हो । व्यापारीहरुको नियत नै ठग्ने हो । तर, यो कुरा जनताले बुझ्दैनन् । के मासु पसलेले खसीबोका रोयो भनेर काट्न छोड्छन् ? व्यापारीले आफ्नालाई पनि छोड्दैनन् ।

पढेर मात्र चेतनाको विकास हुँदैन् । जनताले आफ्नो हकअधिकार खोज्न सकेका छैनन् । व्यापारीले ठगिरहेका छन्, तैपनि उनीहरुको चेत खुल्न सकेको छैन् । पछिल्लो समय चिया पसलेहरुले पेपर कप र प्लास्टिक कपमा चिया बेच्न थालेका छन् । ३० रुपैयाँ लिएर एक घुट्को चिया दिन्छन् ।

यसले व्यापारीलाई फाइदा भयो तर उपभोक्ताको हकमा के ? प्लास्टिकको कपमा चिया खाँदा क्यान्सरको जोखिम हुन्छ । तर, कसले अनुगमन गरेर त्यस्ता व्यापारीलाई कारबाही गर्ने ? एकातिर गिलास माझ्न नपर्ने, अर्कोतिर पानी खर्च नहुने र चिया पनि थोरै दिए पुग्ने । अनि मँहगो पैसा तिरेर ज्यान जोखिममा पार्ने जनता ।

पछिल्लो समय थर्मसमा चिया बोकेर बेच्न हिँड्नेहरु यत्तिकै छन् । उनीहरुले चिया बेच्छन्, पैसा लिन्छन्, हिँड्छन् । चिया खानेले यत्रतत्र कप फालिदिन्छन् । यसले वातावरण प्रदूषण भएको छ । राज्यले कसैलाई पनि नियमन गर्न सकेन् । मधेश प्रदेशका मुख्यमन्त्री स्वयम् खटेर अस्पताल अनुगमन गरिरहेका छन् ।

मापदण्ड पालना नगर्ने अस्पताललाई उनले धमाधम कारबाही गरिरहेका छन् । तर, संघीय राजधानीमा यत्रो निकाय हुँदा कसैले अनुगमनमा चासो देखाएका छैनन् । कर्मचारीहरु गफ ठोक्न र घाम ताप्नमै व्यस्त छन् । बजार अनुगमन कसले गर्ने ? काम नगरेपनि तलब आइरहेकै छ । मर्कामा चाँहि उपभोक्ता र राज्य परेको छ । अधिकारप्राप्त कर्मचारीहरुले बजार अनुगमन गर्ने हो भने राज्यको ढुकुटीमा राजश्व आउँथ्यो । उपभोक्ता ठग्ने व्यापारीहरु कानुनको दायरामा आउँथें । बजार भाउ घट्थ्यो । तर, कसैले पनि यसतर्फ चासो दिएका छैनन् । बजार अनुगमनको जिम्मा स्थानीय सरकारलाई दिइएको छ ।

तर, स्थानीय सरकार अनुगमनमा उत्रिँदैन् । उपभोक्ताले पनि ठगी गर्ने व्यापारीविरुद्ध उजुरी दिँदैनन् । यहाँ त जोपनि तैं चुप मै चुप भनेर बसेका छन् । सामानमा गुणस्तर शून्यबराबर छ । व्यापारीहरुले दिँउसै रात पारेर राज्य र व्यापारीलाई लुटेका छन् । महाबौद्ध, न्यूरोडतिरका व्यापारीले दिनमै करोडौंको व्यापार गर्छन् ।

तर, भ्याट बिल सुको पनि तिर्दैनन् । कोही कर नतिर्ने अनि राज्य विदेशी ऋण लिँदै सरकारी खर्च धान्ने । सर्वसाधारण बेरोजगार छन् । आर्थिक मन्दी छ । यद्यपि, व्यापारीलाई जसरी भएपनि ठग्नु छ । बजारमा बेतिथि व्याप्त छ, सरकार भने सिंहदरबारभित्र निदाएर बसिरहेको छ ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# भक्तपुरमा गायक दीप श्रेष्ठको एकल सांगीतिक साँझ हुने

भक्तपुर। नेपाली सांगीतिक क्षेत्रका एक कालजयी वरिष्ठ गायक एवं संगीतकार दीप श्रेष्ठको एकल प्रस्तुति रहने सांगीतिक साँझ भक्तपुरको सल्लाघारीमा आयोजना हुने भएको छ।

भक्तपुर सांगीतिक समाज र भक्तपुर चेम्बर अफ कमर्सको संयुक्त आयोजनामा वैशाख २० गते, शनिवार इम्पेरियल बैंक्वेटमा हुने आयोजकले एक पत्रकार भेटघाट कार्यक्रम मार्फत जानकारी दिएका छन्।

नयाँ वर्ष २०८२ को अवसर पारेर आयोजना हुन लागेको यस कार्यक्रम मार्फत वरिष्ठ गायक श्रेष्ठले आफ्ना जीवनका कालजयी र मर्मस्पर्सी गीतहरू प्रत्यक्ष रूपमा पस्कने छन्। कार्यक्रममा श्रेष्ठबाट विभिन्न समयमा गायिएका १२ देखि १५ वटा गीतहरूलाई लाइभ म्युजिक ब्याण्डको साथमा प्रस्तुत गरिने भक्तपुर सांगीतिक समाजका अध्यक्ष अल्वर्ट ब्रज्राचार्यले जानकारी दिए।

करिब १००० को उपस्थिति रहने अपेक्षा गरिएको कार्यक्रममा उद्योगी, व्यवसायी, पेशाकर्मी, तथा संगीतप्रेमीहरूको व्यापक सहभागिता रहने उनले जानकारी दिए। कार्यक्रमको टिकट दर रु. १०००/-, १५००/- र २५००/- निर्धारण गरिएको छ।

यस्तै कार्यक्रमस्थलमा स्थानीय उत्पादन, परिकारका स्टलहरू पनि उपलब्ध हुनेछन्। वरिष्ठ कलाकार दीप श्रेष्ठको एकल साँझले युवादेखि वृद्धसम्मलाई समेट्ने मनोरञ्जन दिने आयोजकको विश्वास रहेको छ। यस कार्यक्रमबाट भक्तपुरको सांगीतिक क्षेत्रको व्यावसायिक सम्भावनामा पनि नयाँ उत्साह थपिने अपेक्षासमेत गरिएको छ।

# “भुलको बाटो” सार्वजनिक

काठमाण्डौ। समसामयिक विषयवस्तुमा आधारित लागु औषध तथा लागुपदार्थ दुर्व्यसनी सम्बन्धी जनचेतनामूलक म्युजिक भिडियो एक विशेष कार्यक्रमको आयोजना गरी सार्वजनिक गरिएको छ। वरिष्ठ संगीतकार राजु सिंहको प्रमुख आतिथ्य तथा चलचित्र विकास बोर्डका पूर्व सदस्य वरिष्ठ कलाकार उत्तम केसीको विशेष आतिथ्यमा गीतकार सङ्घ नेपालका अध्यक्ष वसन्त वित्यासी थापा, कलाकार पवन केसी, चलचित्र निर्देशक रामशरण कोइरालाको आतिथ्यमा भिडियो सार्वजनिक गरिएको सो समारोहमा अन्य कलाकार प्राविधिक तथा सेजल एण्ड सिस्टर फिल्मको आयोजनामा चलचित्र सम्बद्धहरुको बाक्लो उपस्थितिमा अनामनगरस्थित सिलौटो रेस्टुरेन्टमा आयोजित सो कार्यक्रम सम्पन्न गरिएको थियो। कुवेर तामाङको कुशल निर्देशनमा रामशरण उप्रेतीको छायांकन तथा मोनु खड्काद्रारा निर्माण गरिएको छ। टेकेन्द्र शाहद्वारा सम्पादित तथा किशोर थापाद्वारा प्रशोधन गरिएको उक्त गीति चलचित्रमा सरिता श्रेष्ठको शृंगार कौशल प्रस्तुत गरिएको छ। ए वान म्युजिसियनको स्टुडियोमा रेकर्डिङ र लाइमलाइट नेपालको तत्वावधानमा निर्मित दुर्व्यसन विरुद्ध जनचेतना जगाउने गीति चलचित्र सन्तोषजनक रुपमा निर्माण गरिएको पाइन्छ। गीति चलचित्रमा सञ्जित भण्डारी,स्याडो रियल,रश्मि भट्ट,ॠचा थापा,दीपा शाही,आयुषा क्षेत्रीको कलाकारीता तथा स्याडो रियलको शब्द किरण भुजेलको गायन डिआरएस क्षेत्रीको संगीत र सुनिल राईको सम्योजन सुन्दर देखिन्छ। प्रमुख अतिथि राजु सिंहद्वारा पानसमा दीप प्रज्ज्वलित गरी कार्यक्रमको उद्घाटन गरिएको सो समारोहमाअभ्यागतहरु राष्ट्रिय सरीक भएका थिए।पुष्कर सुनुवारबाट स्वागत गरिएको कार्यक्रममा भिडियो सन्देश मार्फत मेघ सुवेदीले कार्यक्रम सफलताको सुभकामना दिएका थिए। कार्यक्रममा बोल्दै निर्देशक कुबेर तामाङले अग्रज तथा समकालीन कलाकार,प्राबिधिक हरुको साथ सहयोग र हौशलाले गर्दा चलचित्र निर्माणको काम सम्पन्न गर्न सकिएको बताए। उनले कर्म क्षेत्रमा ईमानदारीका लागि पर्दा जे जस्तो रुपमा चलचित्र निर्माण हुन सक्यो त्यसका कमजोरीका पाटाहरुमा समेत राय सुझावहरु प्राप्त हुन सकेमा आगामी दिनहरुमा अझै उत्कृष्ट काम गर्नका लागि बल मिल्ने भएकोले थप उपलब्धि हासिल गर्न सकिने विचार व्यक्त गरे। यसैगरि मन्तव्यका क्रममा वरिष्ठ कलाकार उत्तम केसीले प्रारम्भमा फोटोग्राफरको रूपमा चिनेका कुवेरजी सँग अब्बल निर्देशकको गुण समेत विद्यमान रहेको कुरा उनका वर्तमानको चलचित्र निर्देशनको क्षमताले प्रमाणित गरेको भन्दै थप उत्तरोत्तर प्रगतिका लागि समेत शुभकामना दिए। यस्तै गीतकार संघका अध्यक्ष तथा गीतकार बसन्त बित्यासी थापाले भुलेको बाटो गीतले सान्दर्भिक र समसामयिक बिषयलाई मार्मिक ढंगले उठाएको बताए। प्रमुख अतिथिको भूमिकामा रहेका वरिष्ठ संगीतकार राजु सिंहले वर्तमान परिप्रेक्ष्यमा नाच्ने गीतहरूको बाढी आइरहेको अवस्थमा कुवेर तामाङले कथा सहितको गीत बनाएर समाजप्रति गुण लगाएको बताए। उनले समाजको ऐनाका रुपमा प्रस्तुत गरिएको गीति चलचित्रले समाजलाई राम्रो सन्देश प्रवाह गरेको बताउँदै नेपाली गीत संगीतलाई उत्कृष्ट बनाउनमा सक्दो योगदान दिनुपर्ने कुरामा जोड दिए। सेसेमी लिम्बुद्वारा कुशलतापूर्वक सहजकर्ताको भूमिका निभाइएको उक्त कार्यक्रम सभ्य एवं भव्य रुपमा सम्पन्न गरिएको थियो।

# “महाभो ज”को टिजर सार्वजनिक

काठमाडौं - जेठ १५ गते प्रदर्शन मिति तोकिएको फिल्म ‘महाभोज’को टिजर सार्वजनिक भएको छ। टिजरमा सहकारीको बचत हिनामिनाको मुद्दा समावेश भएको पाइएको छ।

फिल्ममा खगेन्द्र लामिछाने र नायिका अञ्जना बराइली जोडीको भूमिकामा रहेको टिजरले खुलाउँछ। उनीहरु आर्थिक संकटमा परेको दृश्यबाट टिजरको सुरुवात हुन्छ। टिजरभर नै यो जोडी यही समस्याबाट ग्रसित देखिन्छ।

नायक दयाहाङ राईले फिल्ममा ‘चन्द्र’ नामक पात्रको भुमिका निर्वाह गरेको खुलाउँछ। उनी सहकारीसँग सम्बन्धित व्यक्ति हुन्छन्। उनको जोडीको भूमिकामा नायिका गौमाया गुरुङ छिन्। नायक आर्यन सिग्देल गाउँपालिका अध्यक्षको भूमिकामा रहेको निर्माण पक्षले खुलाएको छ। टिजरमा आर्यन सिग्देलले एक संवाद ‘चन्द्र’सँग सम्बन्धित छ।

उनले भन्छन्, ‘चन्द्रेले यहाँ ठूलै गढबढी गरेको छ।’

टिजरमा ‘हाम्रो पैसा फिर्ता गर’ भन्ने नारा लगाएको सुनिन्छ। यसले चन्द्रको भूमिकामा रहेका दयाहाङले सहकारीको बचत हिनामिना गरेको संकेत गर्छ।

फिल्मले आर्थिक संकटमा परेको व्यक्ति, सहकारी बचत हिनामिना र त्यसले उत्पन्न समस्यामा कथा उठान गरेको संकेत गर्छ।

टिजरको अन्त्यमा नायिक मलिका महत कानुनी झमेलामा परेको देखाइएको छ। दयाहाङ आक्रोशित बनेर एक व्यक्तिको घरमा आक्रमण गर्न गएका छन्। यी दृश्यले दर्शकलाई फिल्मप्रति कौतुहलता प्रदान गर्न सक्छ।

फिल्ममा वसुन्धरा भुसाल, मोहन निरौला, बुद्धि तामाङ, कमलमणि नेपाल, पुष्कर गुरुङ, विनोद न्यौपाने, आभा अर्याल, वीरेन्द्र सिंह कुशवाहलगायतका कलाकारको अभिनय रहेको बताइएको छ।

क्लक वर्क क्रियशन र पिक्चर फ्रेमको संयुक्त ब्यानरमा निर्माण भएको चलचित्रको निर्माता हिमाल कडरिया हुन्। कथा तथा पटकथा विकास सुवेदीले लेखेका हुन्।

# ‘केसरी-२’ : अघिल्लो भागभन्दा कमजोर व्यापार



काठमाडौं - बलिउड नायक अक्षय कुमार स्टारर फिल्म ‘केसरी च्याप्टर- २’ प्रदर्शनरत छ। यो सन् २०१९ मा प्रदर्शनमा आएको अक्षयको हिट फिल्म ‘केसरी’को दोस्रो सिक्वेल हो।

पहिलो भागमा नायिका परणिती चोपडा थिइन्। सिक्वेलमा नायिकामा अनन्या पाण्डेया छिन्।

भारतीय बक्स अफिस ट्र्याक स्याकनिल्कका अनुसार ‘केसरी’ले भारतमा मात्रै १५५ करोड भारुको व्यापार गरेको थियो।

सिक्वेल गत शुक्रबार नेपाली मिति वैशाख ५ मा प्रदर्शनमा आएको थियो। यो फिल्म भारतको ठूलो मध्ये एक धर्मा प्रडक्सनको ब्यानरमा बनेको हो।

ठूलो ब्यानर र हिट सिक्वेल भए पनि यस फिल्मले सुरुवाती दिनमा दर्शकबाट अपेक्षित साथ पाएको छैन।

‘केसरी- २’ले पहिलो दिन शुक्रबार सात करोड ८४ लाख भारु व्यापार गरेको धर्मा प्रोडक्सनले दाबी गरेको छ। त्यस्तै, दोस्रो दिन शनिबार १० करोड आठ लाख भारु ग्रस कलेक्सन गरेको बताएको छ।

‘केसरी’को तुलनामा सिक्वेलको व्यापार कमजोर हो। ‘केसरी’ले पहिलो दिन २१ करोड ६ लाखको व्यापार गरेको थियो। अर्थात्,पहिलो दिन ‘केसरी’को तुलनामा सिक्वेलको व्यापार १३ करोड ७६ लाखले कम हो।

प्रदर्शनको दोस्रो दिन १० करोड आठ लाख ग्रस कलेक्सन गरे पनि सिक्वेलको व्यापार कमजोर देखिन्छ। दोस्रो दिन ‘केसरी’भन्दा सिक्वेलको व्यापार ६ करोड ६७ लाखले कमी छ।

बक्स अफिस ट्र्याक स्याकनिल्कका अनुसार ‘केसरी- २’ले तेस्रो दिन आइतबार ८ करोड ३२ लाख भारुको ग्रस कलेक्सन गरेको छ। यो रकम केही तलमाथि भने हुनसक्छ।

पहिलो भागको भन्दा सिक्वेलको तेस्रो दिनको कमाइ पनि करिब १० करोडको कमजोर छ। यसको पहिलो भाग अर्थात् ६ वर्षअघिको व्यापारसँग तुलना गर्दा पनि सिक्वेलको व्यापार कमजोर दिएको हो।

भारतीय मिडिया आजतकका अनुसार ‘केसरी २’को शनिबारको अनुपेन्सी दिल्लीमा ३० प्रतिशत र मुम्बईमा २३ प्रतिशत छ।

सुरुवाती तीन दिनको व्यापार र सकारात्मक ‘वर्ड अफ माउथ’का कारण यो फिल्मको व्यापार दोस्रो साता बढ्ने विश्लेषण गरिएको छ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ३५ ने.सं. ११४५ बछलाथ्व अक्षय तुतीया बैशाख १७ गते बुधबार, २०८२ 30 April 2025, Wednesday पृष्ठ ८ मूल्य रु

## शिक्षकका जायज माग प्रति प्रभावकारी समन्वय र सहजीकरण कार्य शुन्य !




काठमाडौं । शिक्षकहरुले काठमाडौं केन्द्रीत आन्दोलन शुरु गरेको महिना दिन हुन लागेको छ। तर सरकारमा बस्ने राजनीतिक दलका नेताहरुमा शिक्षकको माग सम्वोधन गर्ने कुनै चासो दिइएको छैन । साथै शिक्षकहरुसमेत शैक्षिक सत्र शुरुआतको बेवास्ता गर्दै र हजारौं निम्न आय भएका आभिभावकहरुका छोराछोरीहरुको भविष्य माथि खेलवाड गर्दै विद्यालय नै बन्द गरेको आन्दोलनमा होमिएको छ । शिक्षकका जायज मागलाई पुरा गर्नु राज्यको दायित्व हो । त्यस्तै शिक्षकहरुले आफ्नो माग पुरा गराउने नाममा राज्यका हजारौं विद्यार्थीको जीवनसँग पनि खेलवाड गर्नु शैक्षिक अपराध हो। गुरुको दायित्व शिष्यको भविष्य बनाउने हो नकि शिष्यलाई अन्धकारमा धेकेल्ने । यसरी सामाजिक सञ्जालमासमेत शिक्षकका पक्ष र विपक्षमा समर्थन र विरोधको स्टाटसहरुले शैक्षिक आन्दोलनलाई कतातर्फ मोडिने हो त्यस तर्फ सरोकारवाला निकाय सजग हुनु आवश्यक छ।

त्यस्तै शिक्षकको आन्दोलनलाई लिएर एमाले उपमहासचिव प्रदीप ज्ञवालीले सामाजिक सञ्जालमा लामो टिप्पणी लेखे- 'शिक्षक साथीहरूलाई एउटै आग्रह छ- खल्तीमा जहिल्यै सलाईको बट्टा बोकेर हिँड्ने र मौका पाउनासाथ आगो झोसेर रोटी सेकाउन खोज्ने प्रवृत्तिसँग होसियार हुनुहोस् । आन्दोलन शुरू गर्दाको रापताप सेलाउँदै गएको छ र अभिभावकहरू अधैर्य हुँदै गइरहेका छन् ।'

ज्ञवालीले पेशागत मागभन्दा शिक्षामन्त्रीको राजीनामा र सरकार परिवर्तनको माग नै मुख्य एजेन्डा बन्न लागेको दाबी गरेका छन् । सोमबार नै नेकपा (माओवादी केन्द्र)का उप-महासचिव जनार्दन शर्माले संसदमा भनेका छन्, 'पछिल्ला तीनवटा सरकारले पटक-पटक शिक्षकसँग गरेका सम्झौता कार्यान्वयन नगर्ने र धोका दिने गर्दा समस्या भएको हो। शान्तिपूर्ण आन्दोलनमा रहेका शिक्षकमाथि सरकारले लाठीचार्ज र पानीको फोहोरा हानेर घाइते बनाएकोप्रति भर्त्सना गर्छु।'

सोमबार नै नेकपा एकीकृत समाजवादी अध्यक्ष माधवकुमार नेपाल र झलनाथ खनालसहितका शीर्ष नेता शिक्षकको मागमा समर्थन जनाउँदै आन्दोलनकारीसँग मिसिन पुगे। तर, आक्रामक केही शिक्षकहरूले 'माग नै सम्बोधन गर्ने भए संसदमै बोल्न आग्रह गर्दै सडकमा नआउन खबरदारी गरे ।

नेताहरू आएपछि शिक्षक थप आक्रोशित हुने देखेर नेपाल 'यो आन्दोलनमा हाम्रो ऐक्यबद्धता छ' भन्दै प्रदर्शनस्थलबाट बाहिरिएका थिए । अघिल्लो दिन शिक्षक आन्दोलनमा झडप भएपछि स्थिति नियन्त्रणबाहिर नजाओस् भनेर प्रहरीले सुरक्षा घेरामै नेपालसहितका नेतालाई बाहिर पठाएको थियो । नेता खनालले त शिक्षकका माग सम्बोधन नगरिए जनआन्दोलन नै गर्ने चेतावनी दिए । शेखर र ज्ञवाली दुवै शिक्षकका माग सम्बोधन गर्न सक्ने सरकार र सदन दुवैतिर छन् । शर्मा प्रमुख प्रतिपक्षी दलका प्रभावशाली नेता हुन् । सरकारदेखि सदनसम्म उनीहरूको बोली बिक्छ। पर्याप्त दबाब बढाएर शिक्षकका जायज माग छिटो सम्बोधन गरेर विद्यालय खोल्ने वातावरण बनाउन सक्छन् । माधव नेपालको दल नेकपा एसबाटै अम्मबरबहादुर थापा शिक्षा विधेयक अड्किएको प्रतिनिधिसभाको शिक्षा समितिको सभापति छन् ।

विद्यालयका ढोका महिनौं बन्द हुँदा दलहरूमा शिक्षकका माग सम्बोधन गर्नेभन्दा कसले बढी जस लिने होडबाजी चलेको छ । राजनीतिकरण गरेर कसले चर्को कुरा गर्ने भन्नेमा प्राय: सबै दलका नेताबीच प्रतिस्पर्धा चलिरहेको छ। समस्या समाधानका लागि संसददेखि सरकार र आन्दोलनकारी शिक्षकसँग नेताहरूले सहजीकरण गर्न सक्छन् । तर, समाधान भन्दा

बाँकी पेज ७ मा

## नेपाल कोरिया मैत्री अस्पतालको १७ औं वार्षिकोत्सव सम्पन्न



भक्तपुर । मध्यपुर थिमि नगरपालिकाद्वारा सञ्चालित नेपाल कोरिया मैत्री नगरपालिका अस्पतालले आफ्नो १७ औं स्थापना दिवस भव्य रुपमा मनाएको छ। कार्यक्रममा प्रमुख अतिथि स्वास्थ्य मन्त्री प्रदिप पौडेलले अस्पतालको उल्लेखनीय प्रगतिलाई मुक्तकण्ठले प्रशंसा गर्दै मन्त्री पौडेलले शहरी क्षेत्रमा नयाँ विशिष्ट अस्पताल बनाउनुभन्दा भएका अस्पतालहरूको क्षमता अभिवृद्धि गर्नुपर्नेमा जोड दिए । नेपाल कोरिया मैत्री अस्पतालले सिटि स्कयान र डायलाइसिस जस्ता अत्याधुनिक सेवा उपलब्ध गराएर उदाहरणीय काम गरेको बताए ।

स्थापना दिवसकै अवसरमा

बाँकी पेज ७ मा

## थिमिका मिठाई पसलहरु कारबाहीमा



भक्तपुर । जिल्ला प्रशासन कार्यालयको संयोजकत्वमा मध्यपुर थिमि र सूर्यविनायक नगरपालिका अन्तर्गत रहेका ५ वटा मिठाइ पसलहरुको आइतबार अनुगमन गरिएको छ। अनुगमनका क्रममा कैफियत देखिएका मिठाइ पसलहरुलाई २७ हजार पाँच सय जरिवाना गर्नुका साथै १३ हजार मुल्य बराबरको बिग्रिएका मिठाइ तथा खुवाजन्य पदार्थ जफत गरी नष्ट गरिएको छ।

माताातीर्थ औंसी (आमाको मुख हेर्ने दिन) को अवसर पारेर नगरपालिकाहरुमा बजार अनुगमन गरिएका हुन् । जिल्लाको मध्यपुर थिमि र सूर्यविनायक नगरपालिकाका विभिन्न ठाउँहरुका मिठाई पसलहरुमा अनुगमन गरिएका हुन्।

जिल्ला प्रशाशन कार्यालय भक्तपुरको नेतृत्वमा भएको अनुगमनका क्रममा स्वास्थ्यको

बाँकी पेज ७ मा

## २०७२ सालको भूकम्पपश्चात सम्पदा पुन:निर्माणमा एक दशक



भक्तपुर । भक्तपुर नगरपालिका र पुरातत्व विभागको संयुक्त आयोजनामा '२०७२ सालको भूकम्पपश्चात सम्पदा पुन:निर्माणको एक दशकको पुनरावलोकन' र अन्तर्राष्ट्रिय वैज्ञानिक समिति (काठमाडौं उपत्यका विश्व सम्पदा क्षेत्र) को तेस्रो वार्षिक बैठकको उद्घाटन कार्यक्रम गत शुक्रबार भक्तपुर दरबार परिसरमा एक भव्य समारोहबीच सम्पन्न भयो । संस्कृति, पर्यटन तथा नागरिक उड्डयन . मन्त्री बद्रीप्रसाद पाण्डेले पानसमा दीप प्रज्ज्वलन गरी उक्त कार्यक्रमको उद्घाटन गरेका थिए ।

मन्त्री पाण्डेले काठमाडौं उपत्यकाका सम्पदाहरु केबल सम्पदा मात्र नभई हाम्रो सभ्यताको चिनारी र परिचयको आधार भएको बताउँदै उपत्यकाका भौतिक र अभौतिक सम्पदाहरुको इतिहासले देशको गर्विलो इतिहासलाई उजागर गर्न महत्वपूर्ण भूमिका खेलिरहेको बताए । उनले भूकम्पले क्षति पुगेका भौतिक र अभौतिक सम्पदाहरु मौलिक शैलीमैं पुन:निर्माण हुनु सबैको लागि गौरवको विषय भएको धारणा व्यक्त गरे ।

सम्पदाप्रतिको मोह र आस्था नयाँ पुस्तामा जागृत गराउने सिलसिलाको रुपमा सम्पदासम्बन्धी चित्रकला प्रतियोगितासमेत आयोजना गरिएको बताउँदै उनले सम्पदाको

बाँकी पेज ७ मा

## सफल बन्न प्रविधिको महत्वपूर्ण भूमिका



भक्तपुर । बागमती प्रदेश सरकारका स्वास्थ्यमन्त्री किरण थापामगरले कुनै पनि उद्यमी व्यवसायीहरु सफल हुनको लागि प्रविधिको महत्वपूर्ण भूमिका रहने बताएका छन् । उद्योग तथा वाणिज्य कार्यालय भक्तपुरको आयोजना तथा भक्तपुर उद्योग वाणिज्य संघको सहकार्यमा बिहीबारदेखि सञ्चालन भएको तीनदिने ई कमर्श तालिमको शनिबार समापन कार्यक्रमलाई सम्बोधन गर्दै स्वास्थ्यमन्त्री थापाले प्रविधिको विकासले धेरै समय लाग्ने काम छिनभरमै हुने गरेको भन्दै प्रविधिलाई सही तरिकाले, सकारात्मक परिणाम आउने गरी प्रयोग गर्नुपर्नेमा जोड दिए ।

बागमती प्रदेशको स्वास्थ्य मन्त्रालयले प्रदेशका हरेक अस्पतालमा गुणस्तरीय सेवा दिनका लागि सोहीअनुसार काम गर्दै आएको बताए । उनले अस्पतालमा हुने गरेको भीडलाई कम गर्नको लागि अनलाइन टिकटको व्यवस्था गर्ने तयारी गरिरहेको जानकारी दिए । अहिले मानिसहरु ३० प्रतिशत रोग सर्ने रोगका कारण बिरामी हुने गरेको र ७० प्रतिशत भन्दा बढी नसर्ने

बाँकी पेज ७ मा



# जनस्वास्थ्य कार्यालयको औलो दिवसमा पत्रकारहरुसँग अन्तर्क्रिया



भक्तपुर । विश्व औलो (मलेरिया) दिवस देशभर विभिन्न कार्यक्रमहरुको आयोजना गरी मनाइएको छ । यस रोगबारे जनचेतना जगाउने उद्देश्यका साथ हरेक वर्ष अप्रिल २५ का दिन विश्वभर विविध कार्यक्रम गरेर यो दिवस मनाउने गरिन्छ ।

यस वर्ष 'औलो हटाउन तयार छौं' नाराका साथ यो दिवस मनाइएको हो । यसै अवसरमा जनस्वास्थ्य कार्यालय भक्तपुरले जिल्लामा क्रियाशिल सञ्चारकर्मीहरुसँग अन्तरक्रिया कार्यक्रम गरेको छ । कार्यक्रममा कार्यालय प्रमुख अन्जना खड्काले नेपालमा सन् २०२५ सम्म औलो उन्मुलन गरिसक्ने योजना रहे पनि सफल नभएपछि सन् २०३० सम्ममा औलो उन्मूलन गर्ने योजना रहेको जानकारी गराइन् ।

'एनोफिलिज' नामक लामखुट्टेको टोकाइका कारण औलो (मलेरिया) रोग फैलिने गर्छ । औलो फैलाउने लामखुट्टे प्रायः फोहर तथा दूषित पानीमा बस्छ । विश्व स्वास्थ्य संगठनको तथ्यांक अनुसार औलो रोगबाट प्रत्येक वर्ष विश्वमा करिब ५० हजार मानिस प्रभावित हुने गरेको छ । जसमध्ये करिब २७ प्रतिशतको मृत्यु औलो रोगकै कारण हुने जनाएको छ । औलो रोगका कारण मृत्यु हुनेमा बढी जसो पाच वर्षमुनिका बालबालिकाहरु रहेका छन् ।

सन् २०१६ मा मात्र विश्वका करिब ९१ वटा देशका २१६ मिलियन व्यक्ति औलोबाट प्रभावित भएका थिए । करिब ४ लाख ४५ हजार मानिसको मृत्यु औलो सम्बन्धि रोगका कारण भएको थियो । नेपालमा पनि औलो रोगका कारण गत वर्ष ५४१ जना प्रभावित बनेका थिए । विशेषगरी, खुला बोर्डरका कारण झण्डै ४५ प्रतिशतको हाराहारीमा भारतबाट भित्रिने यो रोग संक्रमित लामखुट्टेको टोकाईबाट मानिसमा सर्ने गर्छ ।

यो रोग संक्रमित पोथी एनोफिलिज नामक लामखुट्टेको टोकाइबाट मानिसमा सर्ने गर्छ । यो रोगको जोखिममा मुख्यतया गर्भवती महिला तथा पाच वर्ष मुनीका बालबालिका रहने गरेका छन् । विश्वमा पाइने औलोको परजीविमध्ये दुई परजीवि प्लाज्मोडियम फाल्सिपेरम तथा प्लाज्मोडियम भाइभेक्स जातको परजीविमात्र नेपालमा पाइन्छ । यसमध्ये प्लाज्मोडियम फाल्सिपेरम गराउने औलो रोग बढी कडा तथा खतरनाक हुन्छ ।

नेपालमा बर्सेनि करिब एक हजारको हाराहारीमा प्रयोगशालाबाट प्रमाणित औलो रोगी भेटिन्छन् । यो रोग वर्षायाम सुरु भएसँगै अप्रिलबाट सुरु भएर जुलाई देखि नोभेम्बर उच्च विन्दुमा पुग्दछ । तसर्थ गर्मी शुरु भए लगतै यो रोगबाट बच्न सरसफाईका साथै पानी जम्न नदिने र आफ्नो घर वरिपरिको वातावरण प्रति आवश्यक सचेतना जगाउनु आवश्यक रहको बारेमा अन्तक्रियात्मक संवाद भएको थियो ।

# सकारात्मक सोचले मात्र उद्यममा सफलता हासिल हुने–कर्ण शाक्य



भक्तपुर । भक्तपुर उद्योग वाणिज्य संघको आयोजनामा जिल्लामा रहेका उद्योगी व्यवसायीहरुका लागि सकारात्मक सोचको अभिबृद्धिको उत्प्रेरणा कार्यक्रम शुक्रबार सञ्चालन गरेको छ । सफल उद्यमी, सकारात्मक सोचका उत्प्रेरक, सामाजिक अभियन्ता एवं लेखक कर्ण शाक्यले कार्यक्रमको उद्घाटन गर्दै सकारात्मक सोच राखेर आआफ्नो उद्योग व्यवसायप्रति प्रतिबद्ध भएर अगाडि बढ्न आग्रह गरे । उनले आफ्नो उद्यम व्यवसायको विगतका अनुभव सुनाउँदै सकारात्मक सोच राखेर उद्यम गरेर सफलता हासिल गर्न कठिन नरहेको बताए । शाक्यले सकारात्मक सोचले खुसी सिर्जना गर्न सकिनेमा जोड दिए । उनले कुनै पनि व्यक्ति धनले मात्र खुसी हुन नसक्ने भन्दै मानिसले अर्थपूर्ण जीवन जीउन सक्नुपर्ने धारणा व्यक्त गरे । साथै उनले व्यवसायमा जोखिम मोलेर काम गर्ने व्यक्ति नै जीवनमा सधैं सफल हुने बताए ।

भक्तपुर उद्योग वाणिज्य संघकी अध्यक्ष रोशनीमैयाँ धौबन्जाले उद्यमी व्यवसायीहरुलाई सकारात्मक सोचसहितको उद्यमशीलता विषयमा उत्प्रेरणा जागृत गराउने उद्देश्यले कार्यक्रम आयोजना गरिएको जानकारी दिइन् । उनले सकारात्मक सोच नै उद्योगी व्यवसायीहरुको लागि सफलता पाउने महत्वपूर्ण कडी भएको बताउँदै सकारात्मक सोचको परिणाम पनि सकारात्मक नै हुने बताइन् ।

यस्तैगरी प्रमुख अतिथि शाक्यले संघले प्रकाशन गरेको २०८२ सालको टेबुल क्यालेन्डर र डायरी विमोचन गरे । कार्यक्रममा संघले शिखर इन्स्योरेन्स कम्पनी लि., इम्पेरियल सेक्युरिटिज कम्पनी लि., नागरिक हस्पिटल, मिड भ्याली स्कुल तथा कलेजलाई प्रशंसा पत्र प्रदान गरेको थियो । संघकी अध्यक्ष धौबन्जाले संघमा आबद्ध जिल्लाका वस्तुगत सदस्यहरुलाई सदस्यता प्रमाण पत्र वितरण गरिन् ।

# लोकतन्त्र जोगाउन सबै राजनीतिक दल मिल्नुपर्ने – उपप्रधानमन्त्री सिंह




भक्तपुर । नेपाली कांग्रेसका नेता तथा पूर्व भूमिसुधार मन्त्री स्व. जगन्नाथ आचार्यको १०२ औं जन्मजयन्तीका अवसरमा विभिन्न व्यक्तित्वहरुलाई सम्मान गर्दै नेता आचार्यकै गृह स्थान कौशलटारमा एक कार्यक्रमकाे आयोजना गरी मनाएको छ । उपप्रधान एवं शहरी विकासमन्त्री प्रकाशमान सिंहले पानसमा दिप प्रज्वलन गरी शुभारम्भ गरेको उक्त कार्यक्रममा बोल्दै सङ्घर्षबाट स्थापित संघीय लोकतान्त्रिक गणतन्त्रलाई जोगाउन जनआन्दोलनका सबै सक्रिय राजनीतिक दललाई पुनः एउटै मोर्चामा उभिन आग्रह गरेका छन् ।

उनले २०४६ सालको जनआन्दोलनदेखि २०६२/६३ को दोस्रो जनआन्दोलनसम्म सम्पूर्ण दलहरू जनतासँगै उभिएर ल्याएको परिवर्तन आज जोखिममा परेको बताउँदै, "धेरै त्याग र बलिदानपछि प्राप्त लोकतन्त्र रक्षा गर्नु हाम्रो साझा दायित्व हो," उनले भने, "अधिकार मात्र मागेर कर्तव्य भुल्ने हो भने उपलब्धि पछाडि धकेलिन सक्छ ।"

उनले पछिल्ला समयमा युवाहरू "लहैलहै" मा लागेर अधिकारमाथि बेवास्ता गर्न थालेको उल्लेख गर्दै सचेत रहन आग्रह गरे । कार्यक्रममा पूर्व मन्त्री ढुण्डीराज शास्त्री तथा नेपाली काँग्रेस भक्तपुरका पूर्व जिल्ला सभापति तिलकप्रकाश कायस्थलाई सम्मान गरिएको थियो । त्यस्तै कार्यक्रममा भक्तपुर बहसमुखी क्याम्पसबाट स्नातक तहमा उत्कष्ट नतिजा हासिल गर्ने छात्रालाईसमेत प्रमाण पत्र र नगद रु. २५०००।- बाट सम्मान गरिएको थियो ।

जगन्नाथ आचार्य स्मृति प्रतिष्ठानका अध्यक्ष बिनोद आचायको सभापतित्वमा भएको कार्यक्रममा नेपाली काँग्रेसका केन्द्रीय सदस्य मदनकृष्ण श्रेष्ठ, नेपाल तरुण दलका पूर्व अध्यक्ष बिनोद कायस्थलगायत वक्ताहरूले स्व. आचार्यले प्रजातान्त्रिक आन्दोलनमा पुऱ्याएको योगदानको स्मरण गर्दै लोकतन्त्र सुदृढ पार्न निरन्तर एकता आवश्यक भएको धारणा राखे ।

# चाँगुनारायणमा स्वच्छ हावा सञ्जालको साधारणसभा



भक्तपुर । भक्तपुरको चाँगुनारायण नगरपालिकामा सक्रिय नगरस्तरीय स्वच्छ हावा प्रवर्द्धन सञ्जालले आफ्नो पहिलो साधारणसभा सफलतापूर्वक सम्पन्न गरेको छ।

सञ्जालले वार्षिक समीक्षा सहित वातावरणीय क्षेत्रमा गरिएको गतिविधिको विस्तृत विवरण सार्वजनिक गर्दै साधारण सभा सम्पन्न गरेको हो। ञ्जालकी सचिव सोनु खड्काले नगर क्षेत्रभित्रको वातावरणलाई स्वस्थ र स्वच्छ बनाउने उद्देश्यले सञ्जालले विभिन्न कार्यक्रम सञ्चालन गर्दै आएको जानकारी दिइन्। नागरिक तहबाट वातावरण संरक्षणमा योगदान पुऱ्याउने हेतुले सञ्जालले उल्लेखनीय पहलहरू अघि सारेको उनले बताइन्।

कार्यक्रममा सञ्जालका सल्लाहकार नवराज काफ्लेले नगरपालिकाले तय गरेका सरसफाइ केन्द्रित कार्यक्रममा सञ्जालको सक्रिय सहभागिता रहेको भन्दै नागरिक पक्षलाई थप जिम्मेवार बनाउन सञ्जालको भूमिकालाई लिएर प्रशंसा गरे। नगरपालिकाको वास शाखाका प्रमुख सुरेन्द्र लामिछानेले सञ्जाललाई नगरका प्रत्येक वडामा कम्तीमा दुईवटा समुदाय छान्दै अध्ययन तथा अनुसन्धानमूलक ढंगले काम गर्न सुझाव दिए। उनले नागरिकस्तरबाट आएको पहललाई संस्थागत गर्दै वातावरण सुधारमा थप योगदान गर्न पालिका प्रतिवद्ध रहेको प्रष्ट पारे ।

सञ्जालका सल्लाहकार तथा वातावरणविद् हिम्मतसिंह लेकालीले फोहरमैला व्यवस्थापनमा विद्यालय र विद्यार्थीहरूको महत्वपूर्ण भूमिका रहेको भन्दै सञ्जाललाई विद्यालय केन्द्रित सचेतना कार्यक्रमलाई प्राथमिकता दिन सुझाव दिए। अन्त्यमा, सञ्जालकी अध्यक्ष रविता लामिछानेले साधारणसभाबाट प्राप्त सुझाव र मार्गनिर्देशनलाई समेट्दै वातावरण सुधारका अभियानलाई अझ प्रभावकारी रूपमा अगाडि बढाउने प्रतिबद्धता व्यक्त गरिन्।

# थिमिमा सेरामिक्सको २ महिने तालिम शुरु




भक्तपुर । नेपाली कांग्रेसका नेता तथा पूर्व भूमिसुधार मन्त्री स्व. जगन्नाथ आचार्यको १०२ औं जन्मजयन्तीका अवसरमा विभिन्न व्यक्तित्वहरुलाई सम्मान गर्दै नेता आचार्यकै गृह स्थान कौशलटारमा एक कार्यक्रमकाे आयोजना गरी मनाएको छ । उपप्रधान एवं शहरी विकासमन्त्री प्रकाशमान सिंहले पानसमा दिप प्रज्वलन गरी शुभारम्भ गरेको उक्त कार्यक्रममा बोल्दै सङ्घर्षबाट स्थापित संघीय लोकतान्त्रिक गणतन्त्रलाई जोगाउन जनआन्दोलनका सबै सक्रिय राजनीतिक दललाई पुनः एउटै मोर्चामा उभिन आग्रह गरेका छन् ।

उनले २०४६ सालको जनआन्दोलनदेखि २०६२/६३ को दोस्रो जनआन्दोलनसम्म सम्पूर्ण दलहरू जनतासँगै उभिएर ल्याएको परिवर्तन आज जोखिममा परेको बताउँदै, "धेरै त्याग र बलिदानपछि प्राप्त लोकतन्त्र रक्षा गर्नु हाम्रो साझा दायित्व हो," उनले भने, "अधिकार मात्र मागेर कर्तव्य भुल्ने हो भने उपलब्धि पछाडि धकेलिन सक्छ ।"

उनले पछिल्ला समयमा युवाहरू "लहैलहै" मा लागेर अधिकारमाथि बेवास्ता गर्न थालेको उल्लेख गर्दै सचेत रहन आग्रह गरे । कार्यक्रममा पूर्व मन्त्री ढुण्डीराज शास्त्री तथा नेपाली काँग्रेस भक्तपुरका पूर्व जिल्ला सभापति तिलकप्रकाश कायस्थलाई सम्मान गरिएको थियो । त्यस्तै कार्यक्रममा भक्तपुर बहसमुखी क्याम्पसबाट स्नातक तहमा उत्कष्ट नतिजा हासिल गर्ने छात्रालाईसमेत प्रमाण पत्र र नगद रु. २५०००।- बाट सम्मान गरिएको थियो ।

# वैज्ञानिक समाजवाद र साम्यवादसम्म पुग्न विश्वका मजदुरहरु एक हुनु जरुरी !




भक्तपुर । नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छेँ (रोहित) को प्रमुख आतिथ्यमा नेपाल नगरपालिका कर्मचारी एशोसियसन भक्तपुर नगरपालिका समितिको आयोजनामा १३६ औं अन्तर्राष्ट्रिय श्रमिक दिवसको अवसरमा प्रवचन कार्यक्रम सोमबार सम्पन्न भयो । कार्यक्रममा बोल्दै अध्यक्ष बिजुक्छेँले वैज्ञानिक समाजवाद र साम्यवादसम्म पुग्न विश्वका मजदुरहरु एक हुनु जरुरी रहेको बताए ।

समाजवाद स्थापनाको निम्ति नागरिक भावनामा परिवर्तन आउनुपर्छ भन्दै उनले समाजवाद ल्याउन समाजवाद स्थापनाका आधारहरु तयार गर्नुपर्ने र अन्य देशको समाजवादबारे पनि अध्ययन गर्नुपर्ने बताए । बौद्धिक र शारीरिक श्रमलाई जीवन्त बनाइराख्न विभिन्न अध्ययन र व्यायाममा जोड दिनुपर्ने बताउँदै उनले ऋणमा चलेको देशको स्थायित्व नहुने र देशलाई परनिर्भरतातर्फ धकेल्ने लाने बताए ।

जनप्रतिनिधि वा सांसद बन्नु सुविधा उपभोगको लागि नभई जनताको निःस्वार्थपूर्वक सेवा गर्नको लागि हो भन्दै अध्यक्ष बिजुक्छेँले नेमकिपाले सांसदहरुलाई पेन्सनको सुविधा दिने विषयको विरोध गर्दै आएको उनले बताए । सामान्य नागरिकहरुको भन्दा कर्मचारीहरुको कर्तव्य बढी हुने बताउँदै उनले कर्मचारीहरु संघर्ष गर्न र आफ्नो कर्तव्यबाट विमुख हुन नहुने धारणा राखे । कर्मचारीहरुमा देशभक्तिको भावना हुनुपर्ने बताउँदै अध्यक्ष बिजुक्छेँले भक्तपुर नगरपालिकाका कर्मचारीहरु अरु भन्दा पृथक भई इमानदारीपूर्वक काम गर्नुपर्ने सुझाव दिए ।

युवाहरु घरखेत बेचेर विदेश जानुभन्दा देशमै लगानी गरेर रोजगारी सिर्जना गर्नतर्फ जोड दिनुपर्ने बताउँदै उनले शिक्षक आन्दोलनले देशलाई शैक्षिक रुपमा पछाडि धकेल्ने बताए । भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले 'नेपालका कम्युनिष्ट नाम गरेका शासक पार्टीहरुले सिद्धान्त र उद्देश्यहरु काम गरेका छैनन्, सत्तामा जानको लागि सिद्धान्तहीन गठबन्धन गर्छन्' भने । पुँजीवादी व्यवस्थामा मजदुरहरुको जीवनको कुनै मूल्य नहुने बताउँदै उनले समाजवादी गणतन्त्रमा मात्र कामदार जनताले सुख पाउने धारणा राखे ।

भक्तपुर नगरपालिकाले स्वयसेवा गर्ने भावनाले प्रत्येक महिनाको १ र १५ गते नगरका विभिन्न ठाउँमा सरसफाइ कार्यक्रमको आयोजना गर्दै आएको बताउँदै उनले देशको राजनीति, संगठन र सेवाबारे कर्मचारीहरुले अध्ययनमा जोड दिनुपर्ने बताए । भक्तपुर नगरपालिकाका उपप्रमुख रजनी जोशीले समाजवादी गणतन्त्र कामदार जनताको लागि उपयुक्त व्यवस्था भएको बताउँदै भक्तपुर नपाले समाजवादका आधारहरु तयार गर्ने किसिमले काम गर्दै आएको जानकारी दिइन् । नेपाल नगरपालिका कर्मचारी एशोसियसन भक्तपुर नगरपालिका समितिका अध्यक्ष गौतमप्रसाद लासिवाले अन्तर्राष्ट्रिय श्रमिक दिवसलाई नारामा मात्र सीमित पार्न नहुने, प्रगतिशील ढंगले मनाउनुपर्छ भन्दै कामदार वर्गको योगदान र भूमिकाबारे चिन्तन मनन गर्नुपर्ने बताए ।

कार्यक्रममा नेपाल क्रान्तिकारी मजदुर संघका अध्यक्ष उपेन्द्र सुवाल, भक्तपुर नपाका प्रमुख प्रशासकीय अधिकृत वसन्त भट्टराईले मई दिवसको सान्दर्भिकताबारे प्रष्ट पारे भने समितिका सहसचिव विकास प्रजापति र सदस्य रामकृष्ण प्रजापति, मजदुर सुन्दर ब्यान्जु र कृष्णराम ह्यंगोजुले पनि बोलेएको थियो ।

# भ्याटिकन सिटीका पोपले के-कस्ता सुविधा पाउँछन् ?



एजेन्सी। भ्याटिकन सिटीमा रहेको पोपको आधिकारिक निवास अपोस्टोलिक दरबार हो । यसलाई पापल दरबार पनि भनिन्छ । सेन्ट पिटर्स बासिलिकाको उत्तरपूर्वमा अवस्थित यो विशाल परिसरमा १७ लाख वर्ग फिटमा फैलिएको १,००० भन्दा बढी कोठाहरू छन् । यस दरबारको निर्माण १५८९ मा पोप सिक्स्टस पाँचौंको शासनकालमा सुरु भएको थियो र उनका उत्तराधिकारीहरूले यसलाई पूरा गरेका थिए । यो एक शताब्दीभन्दा बढी समयसम्म क्याथोलिक चर्चका प्रमुखको परम्परागत निवास थियो ।

पोपको अपार्टमेन्ट अपोस्टोलिक दरबारको तेस्रो (माथिल्लो) तल्लामा अवस्थित छ । पूर्व पोप बसोबास गर्ने अपार्टमेन्ट लगभग ३००० वर्ग मिटरको छ । पोपको निवासमा एउटा चैपल, धेरै कार्यालयहरू, पोपको शयनकक्ष, भोजन कक्ष, एउटा भान्छा र सचिवहरू र घरेलु कर्मचारीहरूका लागि थप कोठाहरू छन् । १९०३ मा, सेन्ट पियस दशौं त्यहाँ बस्ने पहिलो पोप बने । सन् १९६४ मा पोप पल छैठौंले अपार्टमेन्टलाई पूर्ण रूपमा पुनर्निर्माण गरेका थिए । त्यसपछिका हरेक पोपको कार्यकालमा यसमा धेरै संशोधनहरू गरिएका थिए ।

अपोस्टोलिक दरबार प्रशासनिक केन्द्र पनि हो

पोपको निवास हुनुको साथै, अपोस्टोलिक दरबार भ्याटिकन सिटीको प्रशासनिक केन्द्रको रूपमा पनि काम गर्दछ । यसमा क्याथोलिक चर्चका विभिन्न कार्यालयहरू, निजी र सार्वजनिक चैपलहरू, भ्याटिकन संग्रहालयहरू र भ्याटिकन पुस्तकालयहरू छन् । जसमा प्रसिद्ध सिस्टिन चैपल पनि समावेश छ जहाँ माइकलएन्जेलोको उत्कृष्ट कृति रहेको छ । धेरै हिसाबले यो ह्वाइट हाउस जस्तै काम गर्छ ।

निवास मात्र होइन, शासनको केन्द्र पनि ।

मार्च २०१३ मा कार्डिनल जर्ज मारियो बर्गोग्लियो पोप फ्रान्सिस बनेपछि, उनले पोपको अपार्टमेन्टमा बस्न अस्वीकार गरेर भ्याटिकनलाई चकित पारे । बरु उनले डोमस सान्क्टे मार्थे (सेन्ट मार्थाको घर) मा बस्न रोजे । यो भ्याटिकनको त्यो गेस्टहाउस हो जहाँ कार्डिनलहरू सम्मेलनको समयमा बस्छन् । पोप फ्रान्सिसको यो निर्णयले एक शताब्दीभन्दा पुरानो परम्परा तोड्यो । तर बर्गोग्लियोको विगतसँग परिचितहरूका लागि यो पूर्ण रूपमा आश्चर्यजनक थिएन । ब्यूनस आयर्सका आर्कबिशपको रूपमा उनले पनि त्यस्तै गरी भव्य बिशपको दरबारमा बस्न अस्वीकार गरे । त्यसपछि उनी सामान्य बस्ने ठाउँ रुचाउँथे र प्रायः आफ्नै खाना पकाउन्थे ।

पोप फ्रान्सिस सेन्ट मार्थाको घरमा बस्छन्

सेन्ट मार्थाको घर अपोस्टोलिक दरबारको भव्यताभन्दा एकदमै फरक छ । सेन्ट मार्था हाउस एउटा पाँच तल्ले भवन हो जुन १९९६ मा जोन पल द्वितीयको पोपत्वकालमा गरिबहरूको लागि एक प्राचीन धर्मशालाको स्थलमा निर्माण गरिएको थियो । यो पोपको निवास भन्दा साधारण होटल जस्तो देखिन्छ । भ्याटिकन सिटीको सेन्ट पिटर बासिलिकाको छेउमा अवस्थित, यो मुख्यतया पादरीहरूको लागि अतिथि गृहको रूपमा काम गर्दछ । यो साधारण कोठाहरू भएको साधारण भवन हो ।

पहिलेका पोपहरू धेरै साधारण निवासहरूमा बस्थे

पोप फ्रान्सिस सुरुमा कोठा नम्बर २०७ मा बसे, जुन उनलाई अन्य कार्डिनलहरूसँगै छुट्याइएको थियो । पछि उनी सुइट २०१ मा सरे, जुन लगभग ५३८ वर्ग फिट ठाउँ भएको अलि ठूलो आवास थियो । जसमा पोप एउटै सुइटमा बस्थे । उनको सुइटमा एउटा शयनकक्ष, एउटा सानो बैठक कोठा र प्रार्थना गर्ने ठाउँ छ । सुइटमा केही कुर्सीहरू, एउटा सोफा, एउटा डेस्क, एउटा किताब राख्ने केश र एउटा क्रूस छ । शयनकक्षमा गाढा काठको ओछ्यान, वार्डरोब र रातको टेबल पनि छ । पोप फ्रान्सिसको कोठामा आधारभूत आवश्यकताहरू राखिएको थियो ।

पोपले कति कर्मचारी पाउँछन् ?

पोपको सामान्यतया एक निजी सचिव हुन्छ, जसले उनको व्यक्तिगत र आधिकारिक तालिका सम्हाल्छ । पोपको निवासमा धेरै घरायसी सहयोगी, भान्से र सुरक्षा अधिकारीहरू पनि छन् । यद्यपि, पोपको सुरक्षाको जिम्मेवारी भ्याटिकन गार्ड (स्विस गार्ड) मा रहेको छ । तिनीहरू उनको सुरक्षाको लागि २४X७ तैनाथ रहन्छन् । यद्यपि, पोप फ्रान्सिसले आफ्नो लागि सेवकहरूको संख्या पहिलेको भन्दा धेरै कम राखे । उनको शयनकक्ष बाहिर पनि, दिन र रातको पालीमा केवल दुई जना भ्याटिकन गार्डहरू तैनाथ थिए ।

अन्य के के सुविधाहरू उपलब्ध छन्

भ्याटिकन सिटीमा पोपको निजी बगैंचा, पुस्तकालय, कला ग्यालरी, हेलिकप्टर प्याड र आफ्नै निजी चैपल छ । भ्याटिकन बैंक र फार्मेसी जस्ता सुविधाहरू पनि भ्याटिकन सिटीका मानिसहरूका लागि मात्र उपलब्ध छन् । यद्यपि पोप फ्रान्सिस धेरै सरल थिए । उनले महँगा कारको सट्टा साधारण फियाट वा फोर्ड कार प्रयोग गरे । उनी ठूला भोज र शाही खानाबाट टाढा बस्थे । पोप फ्रान्सिसले पुजारी र अधिकारीहरूसँग भोजन कक्षमा खाना खान्थे ।

अब कार्डिनलहरू उनको उत्तराधिकारी छनौट गर्न सेन्ट मार्थाको घर वा कासा सान्ता मार्टामा भेला हुँदैछन् । अर्को पोपले आफ्नो पूर्ववर्तीको बाटो पछ्याउँछन् वा अपोस्टोलिक दरबारको भव्य परम्परामा फर्कन्छन्, त्यो हेर्न बाँकी छ । तर फ्रान्सिसको विनम्र जीवनशैलीले सेन्ट पिटरको कुर्सीमा बस्ने अर्थलाई सधैंको लागि परिवर्तन गरिदिएको छ ।

# उत्तर कोरियाद्वारा ५००० टनको युद्धपोत लन्च, संसारले यसको शक्ति देख्नेछ–किम



एजेन्सी । उत्तर कोरियाले शनिबार फेरि एक पटक सम्पूर्ण विश्वलाई चकित पारेको छ । यसले सम्पूर्ण विश्वलाई आफ्नो सैन्य शक्तिको नयाँ र शक्तिशाली प्रदर्शन गरेको देखाएको छ । उत्तर कोरियाली नेता किम जोङ उनले एक अत्याधुनिक बहुउद्देश्यीय विनाशक युद्धपोत प्रक्षेपण गरेका छन् । उक्त समारोहमा किम जोङ उनले आफ्नो देशको बढ्दो सैन्य क्षमता प्रदर्शन मात्र गरेनन्, अमेरिका र उसका सहयोगीहरूलाई कडा चेतावनी पनि दिएका छन् । उनले स्पष्ट शब्दमा भने कि यदि पश्चिमी शक्तिहरूले सैन्य दबाबको रणनीति जारी राखे भने उत्तर कोरिया पनि आफ्नो प्रतिरोध क्षमतालाई अझ बलियो बनाउन बाध्य हुनेछ ।

देशको सरकारी समाचार एजेन्सी केसीएनएका अनुसार, नवनिर्मित युद्धपोतको तौल लगभग ५,००० टन छ र यो "सबैभन्दा शक्तिशाली हतियार" ले सुसज्जित छ । यो विनाशकारी युद्धपोत पूर्ण रूपमा उत्तर कोरियाको आफ्नै प्रविधि र क्षमता प्रयोग गरेर निर्माण गरिएको हो र सत्तारूढ वर्कर्स पार्टीका सचिव जो चुन योङले यो लगभग ४०० दिनमा सम्पन्न भएको बताए ।

उत्तर कोरियाले यसलाई नौसेनामा समावेश गर्नेछ

प्रक्षेपण समारोहमा आफ्नो भाषणमा किम जोङ उनले युद्धपोतलाई उत्तर कोरियाली नौसेनाका लागि महत्त्वपूर्ण कोसेढुङ्गाको रूपमा स्थापित हुने उल्लेख गरे । उनले घोषणा गरे कि यो नयाँ विनाशकारी युद्धपोत चाँडै नै नौसेनामा समावेश गरिनेछ र अर्को वर्षको सुरुमा सेवा सुरु गर्नेछ । किमले जोड दिए कि यो युद्धपोतले उत्तर कोरियाको समुद्री सिमानाको रक्षा मात्र गर्दैन, टाढाको समुद्रमा आफ्नो शक्ति प्रदर्शन गर्न पनि सक्षम बनाउनेछ ।

किम जोङ उनको आक्रामक भनाइ

रिपोर्टमा जनाइए अनुसार यो नयाँ युद्धपोतलाई "चो ह्योन-क्लास" को रूपमा वर्णन गरिएको छ । जापान विरोधी क्रान्तिकारी योद्धा चो ह्योनको सम्मानमा यसको नामकरण गरिएको हो । यो नामकरणले उत्तर कोरियाको राष्ट्रवादी विचारधारा र इतिहासप्रतिको सम्मानलाई झल्काउँछ । उत्तर कोरियाको यो नयाँ विनाशकारी युद्धपोत समुद्रमा यस्तो समयमा देखिएको छ जब प्रायद्वीपमा उल्लेखनीय रूपमा तनाव बढेको छ ।

उत्तर कोरियाको आणविक हतियार कार्यक्रम र यसको क्षेप्यास्त्र परीक्षणको बारेमा अन्तर्राष्ट्रिय समुदाय चिन्तित छ । यो नयाँ युद्धपोतको समावेशले यस क्षेत्रमा शक्ति सन्तुलनलाई अझ बिगार्न सक्छ । यसले अमेरिका र उसका सहयोगीहरूका लागि नयाँ चुनौतीहरू सिर्जना गर्न सक्छ । किम जोङ उनको आक्रामक बयान र उत्तर कोरियाको बढ्दो सैन्य क्षमता पक्कै पनि पश्चिमी देशहरूको लागि गम्भीर चिन्ताको विषय हो र यसमा उनीहरूको प्रतिक्रिया सबैले हेरिरहेका हुनेछन् ।

# हुआजियाङ ग्रान्ड क्यान्यन पुल: आइफेल टावरभन्दा अग्लो दुई माइल लामो पुल !



एजेन्सी । चीन हुआजियाङ ग्रान्ड क्यान्यन ब्रिजः चीनले धेरै ठूलो पुल निर्माण गर्ने भएको छ। यो पुल जुनमा खुल्नेछ। यसको नाम हुआजियाङ ग्रान्ड क्यान्यन ब्रिज हो। यो गहिरो उपत्यकामाथि बनेको छ र दुई माइल लामो छ।

यो पुल निर्माणमा लगभग २२०० करोड रुपैयाँ खर्च भएको थियो। यसले मानिसहरूको यात्रा धेरै सजिलो बनाउनेछ। पहिले उपत्यका पार गर्न एक घण्टा लाग्थ्यो, अहिले एक मिनेट मात्र लाग्छ।

यो पुल आइफेल टावरभन्दा २०० मिटर अग्लो छ र यसको तौल तीनवटा आइफेल टावर बराबर छ। यो इन्जिनियरिङको चमत्कार हो।

चिनियाँ नेता झाङ शेङलिनले यो पुलले चीनको इन्जिनियरिङ कौशल देखाउने बताए। यसले गुइझोउलाई एक प्रमुख पर्यटकीय स्थल बनाउनेछ। उनले यसलाई 'पृथ्वीमा भएका दरारहरू' पार गर्ने एउटा उत्कृष्ट परियोजनाको रूपमा वर्णन गरे।

यो पुल २०५० फिट उचाइमा रहेको विश्वको सबैभन्दा अग्लो पुल हुनेछ। हालै यसको एउटा भिडियो पनि बाहिर आएको छ। यसमा मानिसहरू यसमा काम गरिरहेको देखिन्छ।

सबैभन्दा विशेष कुरा के छ भने यसको स्टील संरचनाको तौल लगभग २२,००० टन छ, जुन तीनवटा आइफल टावर बराबर छ। अनि यो दुई महिनामा थपियो।

पुलका प्रमुख इन्जिनियर ली झाओले यो पुलको निर्माण देखेर आफू धेरै खुसी र गर्व महसुस गरेको बताए। चीनको यो नयाँ पुलले गाउँहरू जोड्न मद्दत गर्नेछ। यसका साथै, यो एक ठूलो पर्यटकीय आकर्षण पनि बन्नेछ।

रिपोर्टका अनुसार यहाँ बस्ने ठाउँ, सिसाको बाटो र विश्वको सबैभन्दा अग्लो बन्जी जम्प पनि निर्माण गरिनेछ। यो पुल यसकारण पनि विशेष छ किनकि यो उपत्यका माथि पूर्ण रूपमा हावामा झुण्डिएको छ।

चीनको यस क्षेत्रमा विश्वका १०० अग्ला पुलहरूमध्ये लगभग आधा पुलहरू छन्। यी पुलहरूले गाउँहरू जोड्न धेरै मद्दत गर्छन्। सन् २०१६ मा, चीनले बेइपान्जियाङमा १८५४ फिट अग्लो सबैभन्दा अग्लो पुल बनायो।

## थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### शिक्षक आन्दोलन अन्त्यको पहल गरोस् !

संसद्को हिउँदे अधिवेशन अन्त्य भएसँगै विद्यालय शिक्षा ऐनको माग गर्दै शिक्षकहरू काठमाडौंमा केन्द्रीत' अनिश्चितकालीन' आन्दोलन सुरु गरेका थिए । शिक्षक महासंघका अनुसार ऐन नबनेसम्म काठमाडौं केन्द्रित आन्दोलन अन्त्य हुनेछैन । प्रतिनिधि सभाको शिक्षा, स्वास्थ्य तथा सूचना प्रविधि समितिमा हाल विद्यालय शिक्षा विधेयक विचाराधीन छ । समितिले उपसमिति बनाएर यस विधेयकमा काम गरिरहेको दाबी समितिले गरेको छ ।

पक्कै पनि विद्यालय शिक्षा ऐन संघ सरकारको प्राथमिकतामा पर्नुपर्थ्यो । शिक्षकहरूको राजनीतिक पहुँच र संगठन शक्ति बलियो नभएको भए सरकारले जसोतसो ऐन पनि बनाइसक्थ्यो होला । संसद्मा प्रस्तुत विधेयक अलमल्याउन शिक्षक महासंघ पनि जिम्मेवार छ ।

नयाँ शैक्षिक सत्र सुरु हुने बेलामा शिक्षकहरू काठमाडौं बसिरहनु उचित पक्कै हुँदैन । किनकी हजारौं निम्न आय भएका अभिभावकहरुको आफ्नो छोराछोरीको शिक्षा ग्रहण गर्ने थलोको रुपमा सरकारी अर्थात् सामुदायिक विद्यालय मात्र छ । अझ पछिल्लो समय सामुदायिक विद्यालयमा अध्ययन गरेका विद्यार्थीहरुका लागि सरकारबाट आकर्षक सेवा सुविधा पाउने र प्राविधिक लगायत राम्रा उच्च अध्ययनमा समेत सामुययिक विद्यालयका छात्रछात्राले प्राथमिकता पाउन थालेपछि हुनेखाने वर्गका छोराछोरीको प्राथमिकतामा पनि सामुदायिक विद्यालय पर्न थालेको छ ।

यसरी सरकारी विद्यालय प्रति अभिभावक र विद्यार्थीहरुको आकर्षणकै कारण पनि नीजि विद्यालयहरुको विद्यार्थी संख्यामा ह्रास हुँदै गएको वर्तमान समयमा सामुदायिक विद्यालयलाई धरासायी बनाउने मेसोको रुपमा पनि वर्तमान शिक्षक आन्दोलनलाई जाडेर हेर्न थालिएको छ । किनकी शिक्षकहरु नयाँ भर्नाको अवसर अर्थात शैक्षिक सत्रको शुरुआतमै विद्यालय बन्द गरेर सडक सर्घष रोज्नु जिम्मेवार नागरिकको दायित्व होइन् । किनकी लोकतन्त्रमा हरेकले हरेकको मौलिक हक अधिकारको सम्मान गर्नु आवश्यक छ । कसैको राज्यबाट प्राप्त मौलिक हक अधिकारलाई कुण्ठित गरी आफ्नो हक अधिकार सुनिश्चित गर्न आन्दोलन गर्नु मानवीय दायित्व होइन ।

देशको बर्तमान परिस्थितिमा हरेका आम नागरिक जसमा शिक्षक, कर्मचारी, मजदूर, प्राविधिक जनशक्ति, मेडिकल क्षेत्रका व्यक्तित्वहरुसमेत कुनै न कुनै रुपमा सरकारको काम कारवाही र देशको बर्तमान अवस्थाबाट असन्तुष्टी रहनुका साथै राज्यबाट पीडित बनाइएका छन् ।

तसर्थ शिक्षकको सबैभन्दा महत्त्वपूर्ण दायित्व विद्यार्थीहरूको पठनपाठन नै हो । पढाइ नै नहुने हो भने विद्यालयकै पो के अर्थ भयो र रु अनि विद्यालय नभएपछि शिक्षकहरू पनि चाहिएनन् । नेपाली समाजलाई यस्तै शून्य अवस्थामा पुर्‍याउने चाहना सरकार र शिक्षकहरूको त होइन होला नि ?

यसैबीच शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालयले आन्दोलनरत शिक्षकहरूलाई वार्तामा बोलाएको छ । शिक्षकहरूले पनि आन्दोलन स्थगित गरेर वार्ता गर्न जानु उचित हुनेछ । एकातिर, लोकतान्त्रिक गणतन्त्रविरुद्ध भएको अराजक आन्दोलनले वातावरण अशान्त भएको छ । हुनत, शिक्षकहरूको जुलुस शान्त र संयमित भएको भन्दै काठमाडौंका नगरपिताले सराहनासमेत गरेका छन् । तैपनि यस्तो अवस्थामा शिक्षकहरूले राजधानी केन्द्रीत आन्दोलन गर्दा अराजकताको आगोमा घिउ थपिन सक्छ ।

यसैले तत्काल सरकारी पक्षले शिक्षकहरूको चासो सम्बोधन गर्न पहल गरिहाल्नुपर्छ । शिक्षक महासंघले पनि अहिल्यै ऐन चाहियो भन्ने जिद्दी छाडेर सरकारसँग वार्ता गर्नुपर्छ । यसका लागि शिक्षकहरूको माग सम्बोधन हुने र सरकारले पनि हारेको ठान्न नपर्नेगरी विकल्प खोजिनु उचित हुनेछ ।

# शिक्षा र राजनीति एक आपसमा परिपुरक हुनु हुँदैन्

● *अप्सरा गौतम*

शिक्षा र राजनीतिलाई एउटै बिषयमा उल्लेख गर्नु हुँदैन । शिक्षा र राजनीतिक एक रथका दुई पांग्राका रुपमा मान्न पनि सकिदैन् । दुवैमा आकाश पातालको फरक छ । झट्ट हेर्दा विद्यालय स्तरदेखि उच्च शिक्षासम्म राजनीतिक प्रभाव व्याप्त देखिन्छ । त्यसैले अब शिक्षा र राजनीति एक आपसका परिपुरक हुन् भन्ने भाष्य नै सुधार्नुपर्ने देखिएको छ । शिक्षाले मानिसको अन्तरज्ञान उजागर गर्ने र मानिसलाई प्रशस्त उज्यालो मार्ग निर्देशन गर्छ । जसको परिणामस्वरूप कुनैपनि देश र समाजमा परिवर्तन आउन सक्छ । राजनीतिमा पनि अमूल्य र गतिशील परिवर्तन आउनसक्छ । शिक्षाले व्यक्ति र समाजसँग अन्तरसम्बन्ध हुन्छ भने समाजद्वारा नै राजनीति सञ्चालन हुने गर्छ ।

त्यसैले, असल राजनीति र राजनीतिज्ञको लागि शिक्षाको ठूलो महत्व छ । शिक्षा र राजनीति एउटै सिक्काका दुई पाटा हुन् तर शिक्षाबिनाको राजनीति अर्थहिन हुन्छ किनभने विकसित राजनीतिमा बौद्धिक समाजको आवश्यकता पर्दछ । बौद्धिक समाज शिक्षाबिना कल्पना गर्न सकिदैन ।

राजनीतिक हस्तक्षेपका कारण शैक्षिक गतिविधि निस्वार्थ रुपमा सञ्चालन हुन नपाएको कतिपय विद्यालयहरुको गुनासो छ । शिक्षालाई राजनीतिमा मिसावटा गर्नु नै गलत छ । शिक्षा त ज्ञानको ज्योति हो । शिक्षाले व्यक्ति र समाजलाई अध्याँरोबाट उज्यालोतर्फ लैजाने क्षमता बोकेको हुन्छ ।

राजनीति त्यो हो जुन देश र समाजलाई राज्यको नीतिभित्र रहेर परिवर्तन गराउनु पर्छ । राजनीतिको मूल उद्देश्य भनेको जनता, समाज र देशलाई आर्थिक साथै सामाजिक उन्नति, प्रगतितर्फ लैजानु हो । तर अहिले दलीय राजनीति शिक्षण संस्थाहरुमा बढ्दै गइरहेको छ । राजनीति गर्नेहरुले आफू नेतृत्वमा पुग्न शिक्षण संस्थालाई बढी प्रयोग गरेको पाइन्छ । आजभोलि राजनीति भन्ने वित्तिकै शिक्षण संस्था पनि परिचित हुन थालेको छ । अहिलेको अवस्था हेर्ने हो भने गुणस्तरीय शिक्षा हासिल गर्न निजी विद्यालयनै जानुपर्छ भन्ने भाष्य सिर्जना भएको छ । यो सरासर गलत हो । सरकारी र नीजि छुट्याउने बहानामा सरकारी विद्यालयलाई कमजोर देखाउन थालियो । सरकारी विद्यालय भनेको राजनीति गर्ने ठाउँ भन्ने भाष्य सृजना गर्ने शिक्षित वर्ग नै देखिएको छ ।

पछिल्लो समय शिक्षक शिक्षिकामाथि कालोमोसो दल्ने, कुटपिट गर्ने जस्ता अपराधिक घटनाहरू भइरहेका छन् । जुन विद्यार्थी राजनीतिको विकृतिको पराकाष्ठ समेत बनेको छ । देशको प्रत्येक क्षेत्रमा राजनीतिको प्रत्यक्ष प्रभाव भएकाले राजनीतिकर्मीलाई एक कुशल, सभ्य जिम्मेवार तथा असल भन्दा पनि असल नागरिक बन्नेतर्फ प्रेरित गर्नेखालको शिक्षा आजको आवश्यकता हो ।

समयको माग अनुसार शिक्षाको विकास र विस्तार गर्न राजनीति केन्द्रित हुनुपर्ने हो । नेपालको सन्दर्भमा राजनीति भनेको हड्ताल, नारावाजी, जुलुस, बन्द र अनसन जस्ता नकारात्मक कुरा मात्र हो भन्ने पाइन्छ । राजनीतिलाई एक फोहोरी खेलका रूपमा हेर्ने गरेको पाइन्छ यो गलत हो । राजनीति भनेको त आफैँमा एक विज्ञान हो । हामीले राजनीतिलाई राम्रोसँग अध्ययन-अनुसन्धान गर्यौं भने यसको महत्व बुझ्नेछौं । साच्चै भन्ने हो भने राजनीतिमा ऐतिहासिक कालदेखि नै शिक्षाको ठूलो भूमिका रहिआएको छ ।

जबदेखि राणाशासन काल थियो त्यतिबेला नेपालको साक्षरता दर २५ प्रतिशत मात्र थियो । विभिन्न कालखण्डदेखि अहिलेसम्मको शिक्षा क्षेत्रमा भएको विकासका कारणले नेपालको साक्षरता दर ७६.३ प्रतिशत पुगेको छ । बिस्तारै शिक्षा क्षेत्रमा आएको सुधारका कारण देशको राजनीतिको व्यवस्थामा पनि परिवर्तन आइरहेको छ । पञ्चायती व्यवस्थाको अन्त्य, बहुदलीय व्यवस्था, गणतन्त्र व्यवस्थासम्मको अवस्था शिक्षाको विकासका कारण भएको हो । राजनीतिमा भएको परिवर्तनले शिक्षामा पनि परिवर्तन ल्याएको हो । तर हाम्रो देशमा राजनीति गर्ने राजनीतिज्ञ व्यक्तित्वहरू भने शिक्षित कम छन् ।

अब विकास गर्नका लागि राजनीतिक मुल्य मान्यतामा परिवर्तन ल्याउन युवा वर्गले राजनीतिमा प्रवेश गर्नुपर्छ । साथै मानिसहरूलाई राजनीतिको नकरात्मक पक्ष मात्र होइन सकारात्मक पक्ष पनि देखाउनु र बुझाउनुपर्छ । विद्यार्थीले कस्तो गुणस्तरको अपेक्षा गर्ने आजको समस्या हो । शिक्षण संस्थाहरूमा अनुशासित विद्यार्थी, लगनशील शिक्षक र सचेत अभिभावकको खाँचो पर्छ । व्यवहारिक र नियमित आचारसहिंताको व्यवस्था कार्यान्वयन गरिनुपर्छ । राजनीतिकर्मीहरूले आफ्नो अधिकार र कर्तव्यको अज्ञानताका कारणले शिक्षामा राजनीति गरेको हो भने उनीहरुको भूमिका के हुनु पर्ला भन्नेबारे सोच्नु जरुरी छ । जहाँबाट शिक्षामा राजनीतिक हस्तक्षेप गर्ने प्रवृत्तिलाई निरुत्साही गर्न आवश्यक छ । शिक्षामा राजनीति गरेर



शैक्षिक वातावरणलाई तहसनहस बनाउने जोसुकैलाई अनुशासनको दायरामा ल्याउने तथा सार्वजनिक वहिस्कारसमेत गर्ने नीति अवलम्बन गर्नुपर्ने देखिन्छ ।

'समृद्ध नेपाल र सुखी नेपाली'को सपना साकार पार्न दक्ष जनशक्ति उत्पादन गर्न साधनस्रोत सम्पन्न व्यवस्थित शिक्षा हुनुपर्छ । राजनीतिले शिक्षा नीति बनाउने र देशलाई विश्वसामु एक नमुना राष्ट्र बनाउन राजनीतिकर्मीको अहम भूमिका रहन्छ । राजनीतिमा आउने विकृति र विसंगतिलाई न्यूनिकरण गर्नका लागि समेत शिक्षाको अहम् योगदान रहन्छ । शिक्षण संस्थामा आबद्ध शिक्षकदेखि उच्च पदाधिकारीहरुले विद्यार्थीको पठनपाठनलाई केन्द्रमा राखेर नीति, नियम, योजना निर्माण र कार्यान्वयन गरिनु अति आवश्यक छ । सबैको कार्य दक्षताको मूल्याङ्कन गर्दा विद्यार्थीले हासिल गरेको उपलब्धिस्तरलाई प्रतिस्पर्धी श्रम बजारमा खपतको आधारमा प्रतिस्पर्धा गर्नु पर्छ । अब शिक्षाको नाममा आतङ्क फैलाएर शिक्षामा ह्रास आउने गतिविधिको अन्त्य जरुरी छ । परम्परागत प्रवृत्तिबाट माथि उठेर समस्याको निकास खोज्न जरूरी देखिन्छ । संविधान, मुलुकको क्षमता र बालबालिकालाई केन्द्रविन्दुमा राखेर शैक्षिक गतिविधिलाई संयमित र मर्यादित बनाउनु अहिलेको आवश्यकता हो ।

# छापा पत्रकारिताः सम्भावना र रणनीति

● *रमेशकुमार बोहोरा*

समयले हरेक क्षेत्रमा परिवर्तन ल्याउँछ। प्रकृतिदेखि सामाजिक क्षेत्रमा समेत परिवर्तनले आफ्नो प्रभाव छाडेर गएको हामी देख्न सक्छौं । मानव जीवनमा शारीरिक विकाससँगै सीप, सोच, बौद्धिकता र व्यवहारमा समेत परिवर्तन आउँछ । अहिलेको समयमा मानव समुदाय प्रविधिमय बन्दै गएको छ । सबै विषयमा प्रविधिको बोलवाला बढिरहेको अवस्थामा कतिपय नयाँ कार्यक्षेत्रहरू फैलँदै गएका छन् भने कतिपय पुराना प्रविधिमा आधारित कार्यहरू ओझेल पर्दै गएका छन् । अहिलेको युग प्रविधिमैत्री बन्ने र तदनुरूप चल्ने समय हो । नत्र समयको गतिले मानिसलाई पछि पार्छ ।नेपालमा पनि यो परिवर्तनको प्रभाव सञ्चार क्षेत्रमा गहिरो देखिएको छ । विशेषतः छापा पत्रकारिता, जसले कुनै समय राजनीतिक सचेतना र सामाजिक परिवर्तनका लागि महत्वपूर्ण भूमिका खेलेको थियो, अहिले प्रविधि र डिजिटल माध्यमसँगको प्रतिस्पर्धामा संघर्षरत छ ।

२०४६ सालको जनआन्दोलनले नेपालमा प्रजातन्त्र ल्यायो । यो ऐतिहासिक परिवर्तनसँगै सञ्चार क्षेत्रमा नयाँ आयाम सुरु भयो । शिक्षा, स्वास्थ्य, यातायात जस्तै सञ्चारमा पनि लगानीका ढोकाहरू खुले । यसले गर्दा पञ्चायत कालमा दबिइरहेको छापा पत्रकारिताले नयाँ जीवन पायो । छापा पत्रकारिताले प्रजातान्त्रिक चेतना फैलाउने र नागरिकलाई सशक्त बनाउने काममा ठूलो योगदान पुर्‍यायो ।

त्यसबेला सरकारी सञ्चार माध्यमहरू सरकारको भजन-कीर्तनमै व्यस्त भएकाले जनता विश्वास गर्न सक्ने विकल्पका रूपमा साप्ताहिक, पाक्षिक र मासिक पत्रपत्रिकाहरू नै उभिएका थिए । ती पत्रपत्रिकाहरूको मुख्य मिसन प्रजातन्त्र प्राप्ति थियो ।

जनआन्दोलन सफल भएपछि पनि केही वर्षसम्म छापा पत्रकारिता उत्साहजनक रूपमा फस्टायो । नयाँ पुस्ताले पत्रकारितालाई एउटा मिशनको रूपमा लिइरहेका थिए । तर समयसँगै राजनीतिक अस्थिरता, आर्थिक संकट, प्रविधिको तीव्र विकास र पाठकको रुचिमा आएको परिवर्तनका कारण छापा पत्रकारिता अहिले गम्भीर चुनौतीको सामना गरिरहेको छ ।

नेपालमा छापा पत्रकारिताको उदय र विकास

नेपालमा छापा पत्रकारिताको इतिहास खासै पुरानो छैन । राणा शासनको कठोर नियन्त्रणमा सञ्चारमाध्यमको विकास रोकिएको थियो । २००७ सालको प्रजातन्त्र स्थापनापछि केही स्वतन्त्र पत्रपत्रिकाहरूको प्रकाशन सुरु भयो, तर वास्तविक विकास भने २०४६ सालपछिको प्रजातान्त्रिक परिवर्तनपछि मात्र देख्न पाइन्छ ।

राणा शासनकालः

राणा शासनका बेला सञ्चारका साधनहरू प्रायः निषेधित थिए । केही विदेशी अखबार र दस्तावेजहरू सीमित व्यक्तिहरूसम्म मात्रै पुग्थे । नेपाली भाषामा प्रकाशित हुने पत्रपत्रिका अत्यन्तै थोरै थिए। पहिलो नेपाली पत्रिका 'गोरखापत्र' १९५८ साल वैशाख २४ गते सरकारी मुखपत्रका रूपमा प्रकाशनमा आएको थियो । यो सरकारले आफ्ना सन्देश सम्प्रेषण गर्ने माध्यमको रूपमा प्रयोग गर्थ्यो, स्वतन्त्र पत्रकारिताको रूप भने थिएन ।

पञ्चायत कालः

२०१७ सालमा राजा महेन्द्रले पञ्चायती व्यवस्था लागू गरेपछि सञ्चारमाध्यम पुनः सरकारले नियन्त्रणमा राख्यो । सञ्चारले राजतन्त्रको पक्षमा मात्र प्रचार गर्न पाउने अवस्था बनाइयो । तर, यसबीचमा पनि साप्ताहिक पत्रपत्रिकाहरूको भूमिगत वा अर्धस्वतन्त्र प्रयास चलिरह्यो । केही पत्रिकाहरूले सीमित शब्द र संकेतमार्फत शासनप्रति असन्तोष प्रकट गर्ने कोसिस गरे ।

२०४६ सालपछिः

जनआन्दोलनको सफलतापछि मुलुकमा प्रजातन्त्र स्थापना भयो । बहुदलीय व्यवस्थाले व्यक्तिको अभिव्यक्ति स्वतन्त्रताको ग्यारेन्टी गर्‍यो । सञ्चारमा पनि स्वतन्त्रता आयो ।

त्यसपछि नेपाली पत्रकारिताको सुनौलो युग सुरु भयो । नयाँ साप्ताहिक र दैनिक पत्रिकाहरू क्रमशः बजारमा आउन थाले । 'कान्तिपुर', 'अन्नपूर्ण पोस्ट', 'नागरिक', 'नया पत्रिका' जस्ता ठूला ब्रोडसिट पत्रिकाहरूले नेपाली मिडिया बजारमा नयाँ आयाम थपे ।

बाँकी अर्को अंकमा

# रातो मछिन्द्रनाथको कथा भ्रम र यथार्थ

डा. श्यामसुन्दर राजवंशी
(संस्कृतिविद्)

ऐतिहासिक पात्र र ऐतिहासिक घटनाको विषयलाई लिएर साहित्यकारहरुबाट अनेकौं कविता, काव्य, कथा,उपन्यास,नाटक आदि जस्ता प्रशस्त मात्रामा साहित्य सृजना भइरहेको देख्न पाइन्छ । यसरी ऐतिहासिक पात्र र ऐतिहासिक घटना छ भन्दैमा ती साहित्य सबै इतिहासका स्रोत भन्न मिल्दैन । मतलव साहित्यकारहरुले आफुले रचना गरेको साहित्यलाई रोचक बनाउनका लागि अत्यधिक मात्रामा काल्पनिकताको सहारा लिइएको हुन्छ । यसो भन्दै गर्दा त्यसरी साहित्य सृजना गर्नु हुँदैन भन्न खोजेको बिल्कूल होइन । किनभने साहित्य विधाका फाँट र इतिहास विधाका फाँट बिल्कूल अलगअलग छन् ।

साहित्यलाई काल्पनिकता अपरिहार्य छ भने इतिहासलाई काल्पनिकता बर्जित छ । त्यसरी काल्पनिक आवरण दिइएको विवरण र वर्णन जेजति जहाँजहाँ छन् ती ऐतिहासिक कसिमा स्वीकार्य मानिंदैन । त्यसरी कल्पनाको धरातलमा बसेर लेखिएका कुरा प्रमाण मान्नु नाजायज मात्र होइन अपराध नै हो । किनकि यसले सत्यतथ्य इतिहासलाई बङ्ग्याएर भ्रामक र दूषित बनाइ दिन्छन् । तथापि कतिपय ठाउँमा तथ्य र प्रमाणलाई वास्ता नगरी केवल कथालाई मात्र बढी जोड दिंई आएको उदाहरण छ्याप्छ्याप्ती देखी रहेकै हो ।

जुनबेला तथ्य प्रमाणहरु केही भेटिएको थिएन त्यो अवस्थामा तत्कालीन लेखकहरुले कथालाई पनि आधार मानेर लेखी दिए । यसो हो भन्दैमा त्यसको अनुशरण अहिले पनि गर्दै जानुपर्दछ भन्नु बुद्धिमानी हो किमार्थ भन्न सकिंदैन । किनभने अहिले तथ्य प्रमाणहरु प्रशस्त मात्रामा भेटी सकेका छन् । ती तथ्यमा आधारित अभिलेख प्रमाणलाई टेकेर हेर्न छोडी कथालाई समातीरहेको उदाहरण मध्ये पाटनको बुंगमलोकेश्वरको जात्राको प्रसंग पनि एक हो त्यही भएर यो कुरा औंल्याएर यो लेख तयार गरिएको हो ।

तथ्यगत प्रमाण

संसारभरमा लामो अवधिसम्म चल्ने रथजात्रामा अद्वितीय मानिएको रथजात्रा बुंगमलोकेश्वरको रथजात्रा नै ठहरिन्छ । केहीकाल अघिदेखि यो जात्रालाई रातो मत्स्येन्द्रनाथ अर्थात् रातो मछिन्द्रनाथको जात्रा भनेर प्रशिद्ध हुँदै आएको छ । रातो वर्ण भएको मछिन्द्रनाथ भएर रातो मछिन्द्रनाथ भनिएको हो । शुरुशुरुमा यसलाई आर्यावलोकितेश्वर,अवलोकितेश्वर, लोकेश्वर, लोकनाथ, करुणामय र बुंगमतीमा विराजमान भइरहेको लोकेश्वर भएकोले बुंगमलोकेश्वर भनेर पनि प्रशिद्ध रही आएको हो । पछि कालान्तरमा आएर यो लोकेश्वरलाई मछिन्द्रनाथ भन्न थालियो र रातो वर्ण भएकोले रातो मछिन्द्रनाथ समेत भन्न थालिएको हो । जति आर्यावलोकितेश्वरको नाममा गौरव, प्राचीनता, मौलिकता र ऐतिहासिकता अन्र्तिर्नहित छ त्यति रातो मछिन्द्रनाथको नाममा देखिंदैन भन्ने तथ्य पनि सर्बविदित नै रहेको छ ।

छैठौ शताव्दीको मध्यतिरको काठमाडौं धरहराबाट लगनजाने बाटोको आर्यावलोकितेश्वर मूर्तिको पादपीठमा यो अभिलेख पाइन्छ ।

.....सर्व्वसत्वहितसुखार्त्थाय भगवत आर्यावलोकितेश्वरनाथ प्रतिष्ठापितः...

(लिच्छविकालका अभिलेख,पृष्ठ १७७)

यस अभिलेखमा संवत् र राजाको नाम अस्पष्ट भइसकेका छन् तापनि यो राजा रामदेवको पाला( इ.सं ५४३) हो, यसमा सारा प्राणीको हित र सुखकोलागि भगवान आर्यावलोकितेश्वरनाथको स्थापना गरेको व्यहोरा छ । यसमा दाता मणिगुप्तले आफना पत्नी महेन्द्रमतीसंगै भएर दानधर्म गरेको कुरा छ । यही आर्यावलोकितेश्वरनाथलाई कालान्तरमा आएर रातो मछिन्द्रनाथ भन्न थालिएको हो ।

संवत् ४७९(ई.सं ५५६)को काठमाडौं ब्रम्हटोलको अवलोकितेश्वरको पादपीठ अभिलेख पाइन्छ । अभिलेखको अंश यसप्रकार छ

संवत् ४७९ द्वितीय आषाढ.........यजीव.....भगवदार्या............

(लिच्छविकालका अभिलेख,पृष्ठ १८५)

यस अभिलेखमा राजा गणदेवको पालामा संवत् ४७९ द्वितीय आषाढ ...प्रियजीवले भगवान आर्यावलोकितेश्वर ...स्थापना गरे भन्ने व्यहोरा परेको छ । यसमा व्यहोराले आर्यावलोकितेश्वरको पादपीठ अभिलेख भनेर बुझाउँछ भने हाल लोकेश्वरको मूर्ति हराइसकेको हुनाले नारायणको मूर्ति राखिएको पाइन्छ । जेहोस् यसले आर्यावलोकितेश्वरको मूर्ति र पूजाको परम्परा उहिलेदेखि नै विद्यमान रहेको प्रमाणित गर्दछ ।

संवत् २९(ई.सं ६०६)को बुंगमतीको अंशुवर्माको अभिलेखमा शिरोभागमा दुइतिर मृग र बीचमा धर्मचक्र अंकित भएकोले बुंगमती बौद्ध क्षेत्रमात्र होइन यहाँ अवलोकितेश्वर विराजमान रहेको क्षेत्र भन्ने स्पष्ट हुन्छ । यसमा बूगायूमी(बुंगमती) ग्रामका मुखियालगायत गृहस्थीहरुलाई कुशल मंगल सोधेर सनद जारी गरेको विषय छ । यो ठाउँमा बुंगमलोकेश्वर विराजमान भएको विकसित एवं घना बस्ती भैसकेको भएर नै व्यवस्था गर्न सनद जारी गर्नु परेको कुरा स्वतःसिद्ध छ ।

संवत् ३१(ई.सं ६०८) वैशाखको पाटन चक्रवहिलको आर्यावलोकितेश्वरको पादपीठ अभिलेख पाइएको छ । यस अभिलेखको अंश यस प्रकार छ

.............भगवतार्यावलोकितेश्वर मुद्दिश्य दशमानिका पूजां कर्तव्या.............

(Journal of Patan Museum volume 6, 2024 page 89 )

यसमा भगवान आर्यावलोकितेश्वर पूजा आदि कार्य गर्ने उद्देश्यले दश मानिका छुट्याएको व्यहोरा परेको छ । यसमा व्यहोराले आर्यावलोकितेश्वरको पादपीठ अभिलेख भनेर बुझाउँछ भने हाल लोकेश्वरको मूर्ति हराइसकेको हुनाले हःखा गल्लीमा स्थापना भएको गणेशको मूर्तिको पादपीठको रुपमा प्रयोग भइरहेको छ । जेहोस् यसबाट पनि आर्यावलोकितेश्वरको मूर्ति र पूजाको परम्परा उहिलेदेखि नै विद्यमान रहेको प्रमाणित हुन्छ ।

काठमाडौं ढोकाटोल चसाँदोको वण्डाहिटीको अभिलेखमा पनि आर्यावलोकितेश्वरको उल्लेख पाइएको यस प्रकार छ ।

..............सर्व्वसत्वो बुद्धो भवेत् क्षेत्रञ्च भूमि १० भगवतोस्यावलोकितेश्वरस्य..........

(लिच्छविकालका अभिलेख,पृष्ठ ३८६)

यस अभिलेखमा संवत् र राजाको नाम अस्पष्ट भइसकेका छन् तापनि यसमा अंकितलिपि अंशुवर्माको पालाको छ । यसमा सारा प्राणीले बुद्धत्व प्राप्त गरोस् भनी १० भूमि खेत यी भगवान अवलोकितेश्वरको लागि धूप बाल्न भनी गुठी राखेको व्यहोरा उल्लेख छ ।

पशुपतिको जयदेव द्वितीयको संवत् १५७(इ.सं ७३३) को अभिलेखमा पनि लोकेश्वर करुणाकरको उल्लेख यसरी आइरहेको छ ।

........पदमं किं करणाकरस्य करतो लोकेश्वरस्यागतं.............

( लिच्छविकालका अभिलेख, पृष्ठ ५५१)

करुणामय लोकेश्वरको हातबाट आएको कमल पो यो हो कि ? भन्ने व्यहोरा परेको छ । यसबाट पनि लिच्छविकालमा लोकेश्वर करुणामयको महिमा व्यापक रुपले चर्चा परिचर्चा हुने गर्दथ्यो भन्ने प्रष्ट हुन्छ ।

पाटन यंगवहालमा अवलोकितेश्वरको मूर्ति र त्यसको पादपीठमा संवत् १८० (इ.सं ७५७) को अभिलेख यस प्रकार छ ।

एतङ्गामे लहुग्वले प्रतिवसंहूंधर्मजीवःस्वयम् प्राकार्षीदवलोकितेशममलम्पाषाणमत्यद्भूतम्

एतङ् ग्राम लहुग्वलमा बस्ने धर्मजीवले कुबाटोमा हिंडेका.......चित्त भएका प्राणीहरुलाई......गम्भीर संसारको दुःखबाट सँधै छुटकारा दिलाउन सफा अति अद्भूत ढुंगाको अवलोकितेश्वर आफै बनाए ।

(लिच्छविकालका अभिलेख, पृष्ठ ५९१)

यसरी प्राप्त भएका लिच्छविकालका अभिलेखहरुमा करुणामय लोकेश्वरको स्थापना एवं पूजा अर्चना गुठी आदिको व्यवस्था त्यही बेला भइसकेको तथ्य व्यापक रुपले प्रचारित थिए भन्ने प्रमाणित हुन्छ ।

गोपालराज वंशावलीमा – "श्री नरेन्द्रदेव वर्ष ३५ तस्य आचार्य बन्दुदत्त द्वयेन, श्री बुग्मलोकेश्वर भट्टारकस्य जात्रा कृता भवति ॥" उल्लेख छ । यसमा नरेन्द्रदेव वर्ष ३५,र आचार्य बन्धुदत्त दुइजनाले बुंगमलोकेश्वरको जात्रा चलाए भनिएको छ । यसबाट ३५।३६ वर्ष शासन गर्ने नरेन्द्रदेव कुन चाहिं हो उनैलाइ ईंगित गरेको छ र नेपालमण्डलमा बुंगमलोकेश्वर धेरै अघिदेखि थियो यिनले केवल जात्रा मात्र चलाएको थियो भन्ने स्पष्ट बोलेको छ । त्यसैले नरेन्द्रदेव नाम गरेको राजा चार जना पाँच जना जतिसुकै होउन ३५।३६ वर्ष शासन गर्ने केवल प्रथम नरेन्द्रदेव मात्र देखिन्छ अरु छैन । आचार्य बन्धुदत्त पनि प्रथम नरेन्द्रदेवको समकालीन व्यक्ति थियो भनेर स्पष्ट बोध हुन्छ ।

प्रथम नरेन्द्रदेवको समय इ.सं ६४३ देखि ६७९ पर्दछ । यदि कसैले नरेन्द्रदेवको समय कलिगत ३६७६ भन्छ भने त्यो गलत भनेर बुझ्नु पर्ने हुन्छ । किनकि कलिगत ३६७६ भनेको इस्वी ५७५ हुन आउँछ । यस प्रकार प्रथम नरेन्द्रदेव भन्दा पनि सयवर्ष अगाडि अर्को नरेन्द्रदेव नामको राजा नेपालमण्डलमा थियो भन्ने संकेतसम्म पनि कुनै इतिहासमा पाईदैन । त्यसैले कथामा कलिगत ३६७६ भनेर जुन लेखियो त्यो मनगढन्त रुपले कल्पना गरेको सालमिति अंक मात्र हो भनेर बुझ्न सकिन्छ । किनभने इसं ५७५ भन्दा पनि धेरै अगाडि नै आर्यावलोकितेश्वरको प्रख्याती नेपालमण्डलमा भइसकेको थियो भन्ने कुरामाथि उल्लेख भएको अभिलेख प्रमाणहरुले पनि स्पष्ट पारी सकेको कुरा हो ।

कथामा आधारित कुरा

बुंगमलोकेश्वर (बुंगद्योया बाखं ) अर्थात् श्री मत्छेन्द्रनाथ महात्मे रचनालाई आधार बनाउनेहरुले मछिन्द्रनाथ भारतको

बाँकी पेज ६ मा

# ५ मिनेटको क्रियालें हृदयघातबाट सुरक्षित

एजेन्सी । एक अध्ययनले खुलासा गरेको छ कि यदि कसैले नियमित रूपमा पुश-अप गर्छ भने, मुटु सम्बन्धी गम्भीर रोगहरूको जोखिमबाट बच्न सकिन्छ । आजकल मुटु सम्बन्धी रोगहरू मध्ये हृदयघातका घटनाहरू तीव्र गतिमा बढिरहेका छन् । तपाईंले सधैं समाचारमा पढ्नुभएको होला कि मानिसहरू हिंड्दा मरेका थिए र कोही नाच्दा मरेका थिए । यी मध्ये धेरैजसो अवस्थामा, मानिसहरूलाई पहिले नै मुटुसँग सम्बन्धित जटिलताहरू हुन्छन् तर तिनीहरूलाई पछि थाहा हुन्छ । किनभने यी रोगहरूमा सुरुमा शरीरमा लक्षणहरू देखा पर्दैनन् । यदि यस दृष्टिकोणबाट हेर्ने हो भने पुश अपले तपाईंलाई यी समस्याहरूबाट बचाउन सक्छ ।

पुश अपका फाइदाहरू

हार्वर्ड विश्वविद्यालयले गरेको एक अध्ययनले यो पनि पत्ता लगाएको छ कि यदि ३०-४० वर्षको उमेरमा नियमित रूपमा पुश-अप गरियो भने यसको धेरै फाइदा हुन्छ । यसले मुटुको क्षमता बढाउँछ र धमनीहरूमा कोलेस्ट्रोल जम्मा हुने सम्भावना धेरै कम हुन्छ । अध्ययनहरूका अनुसार, पुश-अपले हृदयघात र स्ट्रोक जस्ता धेरै रोग र दुर्घटनाहरूलाई रोक्छ । यो अध्ययन जेएएमए नेटवर्कमा प्रकाशित भएको छ । अध्ययनमा, दमकलमा रहेका केही व्यक्तिहरूको पुश-अपको तीव्रता र स्वास्थ्यको तथ्याङ्क सङ्कलन गरिएको छ । यो तथ्याङ्कको विश्लेषण गरेपछि, आधा मिनेटमा ४० बार पुशअप गर्ने अग्निनियन्त्रकहरूलाई अर्को १० वर्षसम्म हृदयघात आदि जस्ता मुटुसँग सम्बन्धित रोगहरूको जोखिम लगभग कुनै नभएको पत्ता लाग्यो । यद्यपि, ३० सेकेन्डमा १० भन्दा कम पुश-अप गर्नेहरूलाई भविष्यमा हृदयघातको जोखिम बढी थियो ।

# खाली पेटमा सुकुमेल पानी पिउनाले तौल घटाउन मद्दत गर्छ ।

एजेन्सी । सानो सुकुमेलले परिकारको स्वाद र सुगन्धलाई दोब्बर मात्र बनाउँदैन, यसले धेरै फाइदाहरू पनि प्रदान गर्दछ । सानो हरियो सुकुमेलमा धेरै पोषक तत्वहरू हुन्छन्, जसले शरीरलाई धेरै तरिकाले फाइदा पुर्‍याउँछ । खाना खाएपछि मुखलाई ताजा बनाउनको लागि तपाईंले सानो सुकुमेल मुखमा राख्न सक्नुहुन्छ, तर यसलाई नियमित रूपमा सेवन गर्नु स्वस्थकर पनि हुन सक्छ । तपाईं हरेक दिन एउटा सुकुमेल खान सक्नुहुन्छ । यति मात्र होइन, सुकुमेल चपाउनुको साथसाथै सुकुमेलको पानी पिउनु पनि धेरै फाइदाजनक छ । यदि तपाईं स्वस्थ रहन र चम्किलो छाला प्राप्त गर्न चाहनुहुन्छ भने सुकुमेलको पानी पिउने प्रयास गर्नुहोस् ।

सुकुमेल पानी पिउनुका स्वास्थ्य लाभहरू

- यदि तपाईंको तौल बढिरहेको छ भने तपाईं सुकुमेलको पानी पिउन सक्नुहुन्छ । यसमा केही तत्वहरू हुन्छन् जसले रक्तसञ्चार सुधार गर्छ र क्यालोरीहरू पनि बर्न गर्न मद्दत गर्छ । सुकुमेलको पानी पिउनाले तपाईंलाई पेट भरिएको महसुस हुन्छ, जसले गर्दा तपाईंलाई धेरै खानबाट बच्न मद्दत गर्छ ।

- सुकुमेलको पानी पिउनाले छालालाई पनि फाइदा हुन्छ । यसमा एन्टिब्याक्टेरियल तत्वहरू हुन्छन्, जसले मुँहासे निम्त्याउने ब्याक्टेरियाको वृद्धिलाई रोक्छ । ब्रेकआउट कम गर्छ । छाला सफा हुन्छ । यो पानीले शरीरबाट विषाक्त पदार्थहरू निकाल्छ, जसले छालाको एलर्जीबाट बच्न सक्छ । छालामा चमक आउँछ ।

-जसको पाचन प्रणाली प्रायः खराब हुन्छ, जसको पेट राम्ररी सफा हुँदैन, उनीहरूले पनि सुकुमेलको पानी पिउनु पर्छ । यसले पाचन स्वास्थ्यलाई बढाउँछ । यसरी तपाईं पेट सम्बन्धी समस्याहरू जस्तै जलन, ग्यास, अपच, अपच, पेट फुल्ने, कब्जियत आदिबाट बच्न सक्नुहुन्छ ।

- सास गन्हाउने समस्या धेरै मानिसहरूले भोगिरहेका हुन्छन् । धेरैजसो समय गिजा र दाँतमा भएको गुफाका कारण मुखबाट गन्हाउने गर्छ । तपाईंले नियमित रूपमा सुकुमेल चपाउन सुरु गर्नुपर्छ र सुकुमेलको पानी पनि पिउनुपर्छ । यसमा एन्टिब्याक्टेरियल गुण हुन्छ, जसले मुखको दुर्गन्ध हटाउन र ताजा राख्न मद्दत गर्छ । यसले मौखिक स्वच्छता पनि राम्रो राख्छ ।

- सुकुमेलको पानीमा पोटासियम र एन्टिअक्सिडेन्ट हुन्छ, जसले मुटुको स्वास्थ्यलाई पनि सहयोग गर्छ । एन्टिअक्सिडेन्टले अक्सिडेटिभ तनावबाट हुने क्षतिलाई कम गरेर मुटु रोगको जोखिम कम गर्छ । सुकुमेलमा एन्टी-इन्फ्लेमेटरी तत्वहरू पनि हुन्छन्, जसले सूजन कम गर्छ । यसले मुटु रोगको जोखिम पनि कम गर्छ । साथै, उच्च रक्तचाप पनि नियन्त्रणमा रहन्छ ।

- सुकुमेलको पानीले मेटाबोलिज्म पनि बढाउँछ । तपाईंको मेटाबोलिज्मलाई बढावा दिनाले पनि तपाईंको तौल घटाउन मद्दत गर्न सक्छ । तपाईंको मेटाबोलिज्म जति सक्रिय हुन्छ, शरीरले त्यति नै प्रभावकारी रूपमा क्यालोरी जलाउँछ । यस्तो अवस्थामा, यो प्राकृतिक पेय पदार्थ तौल घटाउन चाहनेहरूका लागि उत्तम साबित हुन सक्छ ।

सुकुमेलको पानी कसरी बनाउने

सबैभन्दा पहिले, २ देखि ३ वटा साना सुकुमेल लिनुहोस् । यसलाई धुलो बनाउनुहोस् वा कुट्नुहोस् ताकि यसमा रहेको स्वाद र आवश्यक तेल पानीमा राम्रोसँग घुल्न सकोस् । एक गिलास पानीमा सुकुमेल हाल्नुहोस् । रातभरि यसै छोड्नुहोस् । बिहान यसलाई छानेर खाली पेटमा पिउनुहोस् ।

## रातो....

कामारुकामाक्षा पीठबाट ल्याएको कथालाई विश्वास जनाउँदै आएको छ । यस कथामा बुंगद्योलाई कलशमा थुनेर कामारुकामाक्षाबाट नेपालमण्डलसम्म ल्याइ पुऱ्याउँदा राजा नरेन्द्रदेव, बन्धुदत्त आचार्य र रथचक्र ललितज्यापू एवं कर्कोटक नाग समेत संलग्न रहेको रोचक आख्यान रचना गरी कथा बनाइएको छ । यो कथा कथाकै घेरामा सीमित रहन्छ इतिहासको दायरा भित्र सोझै प्रवेश गर्न र गराउन मिल्दैन ।

यस प्रकारको कथा सुन्नेलाई सुनको माला र भन्नेलाई फूलको माला भन्ने मै टुंगिने गर्दछ । किनभने यो कथा इतिहास होइन । यदि इतिहास हुँदो हो त इतिहासमा नरेन्द्रदेव नाम गरेको राजा नै चारजना छन् । ती मध्ये यस कथाको पात्र नरेन्द्रदेव कुनचाहिं नरेन्द्रदेव भनेर स्पष्ट गरेर त्यो कथाले बोल्न सकेको छैन । अर्को पात्र भनेको बन्धुदत्त आचार्य रहेको छ । उनी पनि कुन ठाउँको व्यक्ति हो ?उनी कर्माचार्य आचार्य हो वा वज्राचार्य आचार्य हो ?यदि इतिहास भइदिएको भए त्यो कुरा स्पष्ट बोल्न सक्नु पर्ने तर बोल्न सकेको छैन । हामीले डायमन समसेरको सेतोबाघ उपन्यास, बसन्ती उपन्यास पढेका छौं । यसमा पनि ऐतिहासिक पात्र र ऐतिहासिक घटनाको वर्णन दिइएको भएपनि ती उपन्यास जसरी इतिहास होइन भन्दछौं त्यसरी नै मछिन्द्रनाथको कथामा इतिहास मान्यहुने गुणहरु छैन भन्न सकिन्छ ।

कालान्तरमा आएर बन्धुदत्त आचार्यलाई कर्माचार्य आचार्य नै हुनुपर्दछ भन्नेहरुले देउपाटन ग्वलका कर्माचार्य भनेर देखाइरहेको हुनु , वज्राचार्य आचार्य नै हुनुपर्दछ भन्नेहरुले टेवहालको वज्राचार्य भन्नु भनेको स्वस्थानी कथा पढ्नेहरुले दक्षप्रजापतीको दरवार टोखामा नवराजको दरवार साँखुमा देखाइरहे जस्तै मात्र हो त्यो भन्दा भिन्दै केही पनि होइन । पछि कालान्तरमा आएर मान्छेहरुले यस्तो अडकल कल्पना गरिएका मात्र हुन् त्यो कुरा पुष्टि हुने अरु स्रोत नभेटिएसम्म प्रामाणिक भन्न मिल्दैन ।

यो कथामा ऐतिहासिकता खोज्न समय काल खण्ड स्पष्ट पार्न सकेको हुनुपर्दथ्यो त्यो पनि स्पष्ट पार्नसकेको छैन । कतिपय लेखकहरुले कथाको सन्दर्भमा टेकेर लेख्दा कलिगत ३६०० मा आर्यावलोकितेश्वर लोकेश्वर बुंगद्य नेपाल ल्याइएको हो भनेर लेखे त कतिले कलिगत ३६७६ मा ल्याइएको भनेर लेखे । यसरी कलिगत चाहे ३६०० भने पनि ३६७६ भने पनि त्यसबेलाका राजा नरेन्द्रदेव नामको व्यक्तिको कुनै अस्तित्व सिद्ध हुने अवस्था छैन ।

देवमाला वंशावलीमा गोरखनाथले नवनाग आसन गरेकोले अनावृष्टि भएको, बन्धुदत्त आचार्यको सल्लाहा अनुसार योगी भेष गरी राजा नरेन्द्रदेव वन्धुदत्त सहित कामारुकामाक्ष गइ मत्सेन्द्रनाथ लिन गएको घटना कलिगत ३६७६ मा घटेको घटना भनी दिइएको छ ।

भाषा वंशावलीमा पनि माथि चर्चा गरेकै बमोजिम कै गोरखनाथ र मत्सेन्द्रनाथको कथा दिइएको छ । अलिकति फरक भनेको बन्धुदत्तलाई शिवमार्ग वौद्धमार्ग दुवै मार्गका ज्ञाता एक बौद्धाचार्य थिए भनिएको छ । यसमा पनि कलिगत ३६७६ मा घटेको घटना भनी दिइएको छ । बन्धुदत्त आचार्यले रचना गरेको मत्सेन्द्रनाथको स्तुतिलाई करुणास्तव र राजा नरेन्द्रदेवले रचना गरेको स्तुतिलाई रुपस्तम्व भन्छ भनेरपनि उल्लेख गरिएको छ ।

मनवज्र वज्राचार्यको हाम्रा चाडपर्वहरुका विवेचना नाम पुस्तकमा यसमा आर्यावलोकितेश्वर र मत्स्येन्द्रनाथ एकै व्यक्ति या इश्वर होइनन् । लोकेश्वरको मूर्ति पूजागर्ने परम्परा प्राचीन लिच्छविकालदेखि नै चलेको तथ्य पाइन्छ । ललितपुरको रातो मत्स्येन्द्रनाथको नाउले प्रसिद्ध भएको लोकेश्वर पनि लिच्छविकालीक मूर्ति नै हुन् भनी जोड दिएको छ ।

कूलचन्द्र कोइरालाको श्री मत्स्येन्द्रनाथ नामक पुस्तक यसमा मत्स्येन्द्रनाथ नेपाल ल्याएको कथालाई केही परिवर्तन गरेको पाइन्छ हुनत यसमा श्री मत्स्येन्द्रनाथलाई कामरुपबाट आह्वान गरी ल्याउने राजा नरेन्द्रदेव र तान्त्रिक बन्धुदत्त आचार्य नै हुन् भन्ने कुरामा कुनै विवाद छैन पनि भनिएको छ । मत्स्येन्द्रनाथ शंकराचार्य भन्दा पछि भएको हुनाले नरेन्द्रदेव भन्ने राजा लिच्छविकालका होइनन भन्ने भनाइलाई उनले जोड दिएर लेख्नु भएको छ ।

सत्यमोहन जोशीको नेपालका जात्रापर्व नामक पुस्तकमा राजा नरेन्द्रदेवको पालामा अनावृष्टि भएको थियो । त्यसवेला राजा नरेन्द्रदेव, तन्त्रविद् बन्धुदत्त आचार्य र रथचक्र भरिया सहित कामाक्षपीठमा गई मछिन्द्रनाथ ल्याएको र मछिन्द्रनाथको रथजात्रा पनि नरेन्द्रदेवले चलाएको थियो । भोटोजात्रा चाही राजा गुणकामदेवको पालामा कलिगत३८२५देखि चलेको भनी जोड दिएका छन् ।

ज्योतिरत्न शाक्यको बुंगद्योया बाखं नामक नेपाल भाषाको पुस्तकमा यो पुस्तक आर्यावलोकितेश्वरको अवदान पुस्तकको एक अंश हो । यसमा पनि कलिगत ३६७६मा अनावृष्टि भएको उल्लेखका साथै मछिन्द्रनाथ ल्याएको कथा देवमाला वंशावलीमा भएकै कथालाई दोहऱ्याइएको कुरा यस पुस्तकमा छ । यो विशुद्ध कथा छ यथार्थ इतिहाससंग मेल खाने खालको छैन । किनभने यसमा व्याख्या गर्दा बन्धुदत्त आचार्य भन्ने व्यक्ति शान्तिकर वज्राचार्यको शिष्य हो । शान्तिकर वज्राचार्य गुणकामदेवको पालाको व्यक्ति भएकोले बन्धुदत्त नरेन्द्रमल्लको पालाको व्यक्ति भनी वर्णन गरिएको हुनु अपत्यारिलो सिद्ध छ । अर्को कथन भक्तपुरमा नरेन्ददेव ललितपुरमा वरदेव राजा थिए मछिन्द्रनाथ कहाँ राख्ने भनी हानथाप हुंदा वरदेवको फैसलाले ललितपुरमा रहने भएको जस्ता इतिहाससंग मेल नखाने कुरा वर्णन गरिएको छ ।

हरिराम जोशीको नेपालका चाडपर्व नामक पुस्तकमा यसमा राजा नरेन्द्रदेव र आचार्य बन्धुदत्तले मत्स्येन्द्रयात्रा चलाए । राजा नरेन्द्रदेवको समय १० औं शताव्दीको अन्तिम अथवा ११ औ शताव्दीको प्रारम्भिक समय हुनुपर्छ भनी जोड दिएको छ ।

बद्रीरत्न वज्राचार्यको प्रसिद्ध वज्राचार्य पिनिगु संक्षिप्त विवरण नामक नेपाल लिपि र नेपाल भाषामा लेखिएको पुस्तिकामा राजा गुणकामदेवको पालामा अनावृष्टि भएर हाहाकार भएकोले शान्तिकर वज्राचार्यले नवनाग साधनागरी नवनागको रगतले मण्डल बनाइ पूजा गर्दा वृष्टि भयो भनिएको छ ।

राजा नरेन्द्रदेवको पालामा पनि १२ वर्षसम्म अनावृष्टि भएकोले शान्तिकर वज्राचार्यको शिष्य आचार्य बन्धुदत्त वज्राचार्य राजा नरेन्द्रदेव र रथचक्र समेत गइ कामारुकामाक्षबाट मत्स्येन्द्रनाथ ल्याएको वर्णन लेखिएको छ । यसमा बन्धुदत्तका गुरु शान्तिकर वज्राचार्य हुन् पनि भन्ने यिनी राजा गुणकामदेव समकालीन भनेको छ भने शान्तिकर वज्राचार्यका शिष्य बन्धुदत्त आचार्य वज्राचार्य हो । यिनी लिच्छविकालको नरेन्द्रदेवको समकालीन भनेर पनि जोड दिइयो सो इतिहाससंग कतै तालमेल नभएको सिद्ध हुन्छ ।

भुवनलाल प्रधानको मच्छेन्द्रनाथ सम्वन्धी कथ्य र तथ्य शीर्षकको मधुपर्कमा प्रकाशित लेखमा भमरा रुपी मत्स्येन्द्रनाथलाई कलशमा हाल्दा राजा नरेन्द्रदेवलाई बन्धुदत्त आचार्यले खुट्टाले घचेटेको कुरासम्म उल्लेख गरेको छ । इतिहासमा नरेन्द्रदेव नामको राजा पाच जना थिए त्यस मध्ये दोस्रो नरेन्द्रदेवको पालामा मच्छेन्द्रनाथ ल्याएको संभावना छ भनेर जोड दिएको छ ।

निष्कर्ष

करुणामय बुंगमलोकेश्वरको महिमा लेख्न,सुन्न हरेकलाई चाहना हुन्छ । त्यही भएर करुणामयको महिमा गाथाको लेख पुस्तक ग्रन्थहरु हरेकको घरघरमा जसो संग्रहित रहेका हुन्छन् । त्यसकारण लेखक र लेखको गन्ति गनेर साध्य छैन । तर जोसुकै लेखकले लेखेपनि कथा भनेर लेखेको भए कुनै आपत्ति हुने थिएन । आपत्ति चाहिं यही कि कथालाई समात्ने इतिहासलाई चाहिं तोडमरोड गर्ने गरेको हुनु हो । जसरी राजहाँसले पानीबाट दूधको दूध पानीको पानी छुट्याउँछ त्यसरी नै कथामा भएको ऐतिहासिक तत्वलाई मात्र ग्रहण गरेको भए सुनमाथि सुगन्ध हुने थियो । त्यसतो चाहिं वुंगमलोकश्वरको इतिहास लेख्ने लेखकहरुबाट भइरहेको छैन ।

वास्तवमा नेपालमण्डलमा करुणामय आर्यावलोकितेश्वरको ध्यान दर्शन पूजा इसापूर्वकाल देखि भएर आएको हो । मूर्तिहरु प्राप्त भएको देखिएकै पाँचौं शताव्दीदेखि अटूट रुपले आइरहेको तथ्य जग जाहेर छ । त्यसैले सातौं शताव्दीमा राजा नरेन्द्रदेवको पालामा जात्रा चलाएको कुरा तथ्यको रुपमा आउँछ । त्यस्तै दशौं शताव्दीमा राजा गुणकामदेवको पालामा आएर भोटोजात्रा समेत थपियो । यसरी जात्रा चलाउन जुन विधि विधान अपनाउनु पर्ने हो सो कुरा आचार्य बन्धुदत्तको ठूलो भूमिका रहेको अवश्य हो । इतिहास जगतमा नरेन्द्रदेव नाम गरेको राजा नै चारपाँच जना देखिए भने बन्धुदत्त नाम गरेका आचार्य असंख्य मात्रामा देखा परे । ती सबै आचार्य बन्धुदत्त करुणामय आर्यावलोकितेश्वरको जात्रा चलाउनमा योगदान दिएको व्यक्ति ठहर्ने बिल्कुलै होइन ।

राजा नरेन्द्रदेवको पालामा चलेको नेपालको आफ्नै संवत् हुँदाहुँदै कलिगत संवत् लिनुपर्ने आवश्यकता छैन । एकजनाले हचुवाको भरमा ३६७६ लेख्ने वित्तिकै त्यो ठीक बेठिक केही नछुट्याई सबैले आँखा चिम्लेर ग्रहण गर्दै आउनु उचित होइन ।

प्रथम नरेन्द्रदेवले ३५ वर्ष पूरा राज्य गरेका थिए भने दोस्रो र तेस्रो नरेन्ददेवले पनि ३५ वर्ष राज्य गरेको प्रमाण खुलेको हुनुपर्यो त्यो छैन । त्यतिवेला भक्तपुरमा नरेन्द्रदेव पाटनमा वरदेव थिए भन्नु इतिहास तोडमरोड गरेको ठहरिनु हो ।

बन्धुदत्त शान्तिकर वज्राचार्यको शिष्य पनि भन्ने शान्तिकर वज्राचार्य दशौं शताव्दीको गुणकामदेवको समकालीन भन्दै गर्दा चेला बन्धुदत्त भने सातौं शताव्दीको भनेर जिकिर गर्ने जस्तो अशोभनीय कुरा इतिहास विरुद्ध हुने कुरा हो । त्यसमाथि मछिन्द्रनाथको कथा १२ औं शताव्दी देखि चलेर आएको पनि देखाउने यता इतिहास चाहिं लिच्छविकालसंग जोड्ने गर्दा तालमेल कहीं नमिल्ने भएकोले यसप्रकारको इतिहासको मर्महीन कुरा कसैले गर्नु गराउनु भएन भन्ने नै यस लेखको मूल उद्देश्य हो ।



## लिभरपुललाई प्रिमियर लिग उपाधि

एजेन्सी - लिभरपुलले इंग्लिस प्रिमियर लिगको उपाधि जितेको छ । टोटेनहम हटस्परलाई आइतवार भए)को खेलमा ५-१ ले पराजित गरेसँगै लिभरपुलले उपाधि पक्का गरेको हो । दोस्रो स्थानको आर्सनलको कमजोर प्रदर्शनका कारण लिभरपुललाई अन्तिम ५ खेलबाट मात्र १ अंकको आवश्यक थियो । टोटेनहमका डोमिनिक सोलाङ्केले खेलको १२ औं मिनेटमा गोल गर्दै लिभरपुलाई दबाबमा पारे । तर त्यो अग्रतालाई जोगाउन टोली असफल रह्यो ।

घरेलु टोलीका लागि लुइस डियाजले १६ औं मिनेटमा बराबरी गोल फर्काए । त्यसको ८ मिनेटपछि एलेक्सिस म्याक एलिस्टरको गोलमा लिभरपुल अगाडि लाग्यो । ३४ औं मिनेटमा कोडी गाक्पोले गोल गरेपछि पहिलो हाफमा लिभरपुलले ३-१ को अग्रता कायम गर्यो ।

६३ औं मिनेटमा मोहम्मद सलाहले लिभरपुलको लागि चौथो गोल गरे । डेस्टिनी उडोगीले आफ्नै पोस्टमा गोल गरेपछि लिभरपुलको अग्रता बढ्यो । अन्तिम सिठी बज्नासाथ अनफिल्डमा अविस्मरणीय दृश्यहरू देखिए ।

शीर्ष स्थानको लिभरपुल (८२ अंक) ले आर्सनललाई १५ अंकले पछि परेको छ । टोटेनहम लगातार हारसँगै १६ औं स्थानमा यथावत छ । समग्रमा लिभरपुरले चार खेल बाँकी रहदै प्रिमियर लिगको उपाधि जितेको हो । साथै लिभरपुलले सर्वाधिक प्रिमियर लिगको उपाधि विजेता म्यानचेस्टर युनाइटेडको किर्तिमानमा बराबरी गरेको छ । यी दुवै टिमले सर्वाधिक २०- २० पटक जितेको छ । आइतवार कै अर्को खेलमा बोर्नमाउथ र म्यानचेस्टर युनाइटेडले १-१ को बराबरी खेलेको छ ।

त्यस्तै इप्स्विच टाउन भने प्रिमियर लिगबाट रेलिगेसनमा परेको छ । १० खेलाडीमा सिमित भएको न्युक्यासल युनाइटेडसँग शनिवार ३-० ले पराजित भएसँगै इप्स्विच रेलिगेसनमा परेको हो । बेन जोनसनले पहिलो हाफमै दुई पहेँलो कार्ड पाएर मैदानबाट बाहिरिए । जसको न्युक्यासलले त्यसको फाइदा उठायो ।

अलेक्जेन्डर इसाकले पहिलो हाफको इन्जुरी समयको चौथो मिनेटमा पेनाल्टीमार्फत पहिलो गोल गरे । त्यसपछि दोस्रो हाफमा ड्यान बर्न र विकल्प खेलाडी विलियम ओसुलाले हेडमार्फत गोल गरेपछि न्युक्यासलको जित पक्का भयो ।

इप्स्विच अब साउथह्याम्प्टन र लेस्टर सिटीसँगै अर्को सिजन च्याम्पियनसिपमा खेल्नेछ । यो जितसँगै न्यूक्यासल इंग्लिस प्रिमियर लिग अंक तालिकाको तेस्रो स्थानमा उक्लिएको छ । यद्यपि छैटौं स्थानमा रहेको नटिंघम फरेस्टभन्दा मात्र २ अंकले अगाडि छ । जसको एक खेल कम छ ।

इप्स्विच भने तालिकाको १८औं स्थानमा छ । अब वेस्ट ह्याम युनाइटेडलाई भेट्टाउने कुनै गणितीय सम्भावना बाँकी छैन । प्रिमियर लिगका अन्य खेलमा चेल्सीले एभर्टनलाई १-०, उल्भ्सले लेस्टर सिटीलाई ३-० ले, ब्राइटनले वेस्ट ह्यामलाई ३-२ ले र फुलह्यमले साउथ ह्याम्टनलाई २-१ ले पराजित गर्यो ।

## म्यानचेस्टर सिटी एफए कपको फाइनलमा

एजेन्सी - म्यानचेस्टर सिटी एफए कपको फाइनल पुगेको छ । नटिङ्घम फरेस्टलाई आइतवार २-० ले हराउँदै सिटी लगातार तेस्रो पटक एफए कपको फाइनलमा स्थान बनाउन सफल भएको हो । वेम्बलीमा मे १७ मा सिटीले क्रिस्टल प्यालेससँग फाइनल खेल्नेछ । सिटीले सुरुवातबाटै खेललाई नियन्त्रणमा राखेको थियो ।

निराशाजनक सिजनलाई सफलताका साथ अन्त्य गर्ने लक्ष्यसहित सिटी आठौं पटक प्रसिद्ध एफए कप ट्रफी उठाउने आशामा छ । खेल सुरु भएको दोस्रो मिनेटमा मातेओ कोभासिचले बक्सको किनारामा दिएको पासलाई २० वर्षे रिको लुइसलाई गोलमा परिणत गरे ।

नुनो एस्पिरिटो सान्तोको टोलीले दोस्रो हाफको सुरुवातमा नै बराबरीको अवसर पाएको थियो । क्यालम हड्सन-ओडोईले बक्समा दिएको पासलाई एन्थोनी एलाङ्गाले गरेको पहिलो प्रहार पोष्टको बाहिर गयो । त्यसको केही क्षणमै सिटीले अन्तर दोब्बर पार्यो ।

५ औं मिनेटमा ओमार मारमसको कर्नरबाट जोस्को ग्वार्डिओलले हेडरमार्फत गोल गरे । फरेस्टले खेलमा फर्किने प्रयास गर्यो । तर सफल भएन । तीनपटक प्रहार गरेको बल बार वा पोष्टमा ठोक्कियो ।

थिमिTIMES
वर्ष १८ अङ्क ३५ २०८२ बैशाख १७ गते बुधबार
30 April 2025, Wednesday


## शिक्षकका....

एकअर्कालाई दोषारोपण गर्नमा नेताहरू तल्लीन रहेको देखिएको छ ।

प्रमुख राजनीतिक दलहरूले उपयुक्त सहजीकरण नगरिदिंदा शिक्षक आन्दोलन थप गिजोलिँदै गएको छ । शिक्षक महासंघको नेतृत्वमा शिक्षकहरू काठमाडौंको माइतीघरदेखि बानेश्वर सडक खण्डमा दिनहुँ शान्तिपूर्ण प्रदर्शन गर्दै आएका छन् । मुख्यगरी सरकारले २०८० असोज १४ गते प्रतिनिधिसभामा प्रस्तुत गरेको विद्यालय शिक्षा विधेयक छिटो पारित गर्नुपर्ने माग शिक्षकहरूको छ । आन्दोलन २६औं दिनमा शिक्षक र प्रहरीबीच बानेश्वरमा निषेधाज्ञा तोड्ने क्रममा घम्साघम्सी हुँदा दर्जनौं शिक्षक र एक पत्रकारसमेत घाइते हुन पुगेका छन् ।

आन्दोलनल ेएक महिना बित्न लाग्दासम्म सरकार र शिक्षकबीच सिरियस वार्ता हुन सकेको छैन । बरु विपक्षीले सत्तालाई र सत्ताले विपक्षीलाई दोषारोपण गर्दा शिक्षक आन्दोलन थप गिजोलिन पुगेको छ । जसले शैक्षिक शत्रको शुरूमै देशभरका सामुदायिक विद्यालयहरू ठप्प भएका छन् । तर, सत्तापक्ष र विपक्षीबीच आरोप प्रत्यारोपको शृंखला बढेर गएको छ । सत्तारुढ दलकै नेताले समेत समाधान नभई समस्याकेन्द्रित भएर शिक्षक आन्दोलनलाई थप पेचिलो बनाइदिएका हुन् ।

सरकार शिक्षकहरूको जायज माग सम्बोधन गर्ने गरी वार्ताको माहोल बनाइरहेको छैन । बरु आन्दोलन उत्कर्षमै पुगेका बेला शिक्षामन्त्री विद्या भट्टराईले राजीनामा दिइन् । शिक्षकको आन्दोलनलाई हेर्ने दृष्टिकोणमा आफ्नै दलबाट शिक्षामन्त्री भएकी भट्टराईसँग ट्युनिङ मिलाउन नसकेको आरोप प्रधानमन्त्रीलाई लागेको छ । विद्या हटेको एकदुई दिनमै शिक्षामन्त्रीमा रघुजी पन्त ल्याइए । उनले वार्ताको प्रक्रिया शुरू गरेका छन् । तर, विषयमा प्रवेश गरेर स्थितिलाई साँघुरो बनाउने प्रयास भएको छैन । आन्दोलनकारी शिक्षकले भने शिक्षा विधेयक नलिई नफर्किने भन्दै सरकारमाथि दबाब बढाइरहेका छन् ।

शिक्षा विधेयक संसदीय समितिमा दफावार छलफलका क्रममा छ । तर, सरकारको नीति कार्यक्रम, बजेटजस्ता विषयले शिक्षा विधेयक संसदबाट तत्काल पारित हुने स्थितिसमेत बनेको छैन । सभामुख देवराज घिमिरेले नै बजेट अधिवेशनमा शिक्षा विधेयक प्राथमिकतामा नपर्ने अभिव्यक्ति दिएका छन् । त्यसपछि शिक्षक थप भड्किएका थिए । शिक्षकका केही माग पूरा गर्न मन्त्रिपरिषद् बैठकले निर्णय मात्रै गर्न सक्छ । यसका लागि पैसाको समेत जरुरत पर्दैन । तर, सरकारले यी कुरालाई पनि सम्बोधन गर्न नचाहेको भन्दै आलोचना खेपेको छ ।

केपी ओली नेतृत्वको सरकारमा नेपाली कांग्रेस प्रमुख साझेदार र सबैभन्दा ठूलो दल हो । तर, शिक्षक आन्दोलित हुन थालेदेखि नै कांग्रेसले पनि शिक्षकका जायज मागका सम्बन्धमा प्रभावकारी समन्वय र सहजीकरण गरेको छैन । शुरूमै सभापति शेरबाहदुर देउवाले शिक्षकका प्रतिनिधिसभासँग वार्ता गरे । तर, समस्या समाधानका कुनै पनि विषय साँघुरिएन । त्यसपछि कांग्रेसले फेरि शिक्षकसँग शीर्ष नेता बसेर वार्ता गरेन । बरु महामन्त्रीद्वय गगन थापा र विश्वप्रकाश शर्माले छलफल गरे । सरकार सञ्चालन गर्ने उच्चस्तरीय संयन्त्रका सदस्य भए पनि महामन्त्री थापा नै सरकारमाथि खनिन थालेका छन् । शिक्षकका मागप्रति सरकार सिरियस नभएको थापाले हरेक सार्वजनिक मञ्चमार्फत बोलिरहेका छन् ।

शिक्षक आन्दोलन जारी रहेका बेला प्रधानमन्त्री केपी शर्मा ओलीले कांग्रेस सभापति शेरबहादुर देउवालाई आ-आफ्ना संघ-संगठनलाई फिर्ता गराउन प्रस्ताव गरे पनि देउवाले नमानेको नेताहरू बताउँछन् । ओलीले जायज माग शिक्षा विधेयक पारित गर्दा सम्बोधन गर्ने भन्दै शिक्षक संगठनलाई आफूले फिर्ता पठाउने र शिक्षक संघका शिक्षकलाई फिर्ता पठाउने वातावरण बनाउन देउवासमक्ष आग्रह गरेका थिए । तर देउवाले ओलीको प्रस्ताव नमानेको स्रोतको दाबी छ । कांग्रेस नेताहरूले शिक्षकका जायज मागलाई सम्बोधन गर्नुपर्ने मत राखेका छन् । जायज माग सम्बोधन गर्ने प्रक्रिया शुरू गरेर केही वर्षमा टुंग्याउनुपर्ने कांग्रेसको प्रस्ताव छ ।

यता सरकारको नेतृत्व गरेको एमाले भने शिक्षकका माग सम्बोधन गर्नै नसक्ने निचोडमा छ । अघिल्लोपटक पनि शिक्षकको दबाबमा पर्याप्त छलफल नै नगरी विधेयक ल्याउँदा समस्या आएको एमालेको दाबी छ ।

त्यस्तै, संविधानले माध्यमिक तहसम्म शिक्षाको जिम्मा स्थानीय तहलाई दिएको छ । तर, शिक्षकले जनप्रतिनिधिको कार्यसम्पादनदेखि वृत्ति विकासमा मनोमानी गरेको भन्दै यो अधिकार हटाउनुपर्ने माग गर्दै आएका छन् । संविधानले नै गरेको व्यवस्था सहजै हटाउन नमिल्ने एमालेको तर्क छ । १८ प्रकारका शिक्षकलाई स्थायीको प्रक्रियामा लाँदा विश्वविद्यालयबाट उच्च शिक्षा हासिल गरेका विद्यार्थीहरू प्रतिस्पर्धाबाट वञ्चित हुने डर एमालेले देखाइरहेको छ ।

कांग्रेस र एमाले नै मिलेपछि माओवादी यतिखेर सत्ताबाहिर छ । यसैले दिनदिनै सत्ता समीकरण टुट्ने दाबी गरेको माओवादीले शिक्षक आन्दोलनलाई थप उराल्ने र यसलाई चरम राजनीतिकरण गर्ने प्रयास गरेको छ । अब कांग्रेसले सरकारको नेतृत्व गर्नुपर्ने भन्दै माओवादीले आफूहरूले सहयोग गरेर जाने खुला घोषणा गरिसकेको छ । व्यवस्थाविरोधीले दबाब बढाएका बेला माओवादीले कांग्रेस-एमालेको समीकरण टुटाउने र सत्तामा जाने दाउ हेरिरहेको छ ।

## २०७२...

महत्वबारे नयाँ पुस्तालाई सुसूचित गर्दै हस्तान्तरण गर्नुपर्नेमा जोड दिए ।

हाम्रा सम्पदाहरू स्थानीय हुँदै विश्वव्यापी मान्यतासँग जोडिनुपर्ने बताउँदै मन्त्री पाण्डेले सम्पदाहरुको विश्वव्यापी प्रचारप्रसारमा सरोकारवालाहरुले पहल गर्नुपर्ने बताए । सम्पदा संरक्षणमा स्थानीयहरुको सहभागिता महत्वपूर्ण पक्ष भएको भन्दै उनले पुरातात्विक सम्पदामाथि हुने अतिक्रमण र हस्तक्षेपबारे सबैजना सचेत हुनुपर्ने धारणा व्यक्त गरे ।

कार्यक्रमका विशेष अतिथि नेपाल मजदुर किसान पार्टीका सचिव तथा संघीय प्रतिनिधिसभाका सांसद प्रेम सुवालले 'भूकम्पीय जोखिम न्यून गर्ने प्रविधिसहित पूर्वाधार निर्माण गर्ने संकल्प' आजको आवश्यकता भएको बताउँदै उनले पूर्वाधार निर्माणस्थल, निर्माण सामाग्री, निर्माणमा लाग्ने प्राविधिकहरु र अन्य श्रमिकहरु, निर्माणस्थलमा बस्ने सर्वसाधारण जनतालाई भूकम्पीय जोखिम न्युनीकरण गर्ने प्रविधिबारे जानकारी दिने व्यवस्था गर्नुपर्ने बताए । सम्पदा संरक्षणको लागि स्थानीय जनतालाई नै जिम्मेवारी दिने र शिक्षित पार्ने काम गर्नुपर्ने बताए ।

नयाँ पुस्तालाई सम्पदा संरक्षणबारे पाठ्यपुस्तकमै राखेर अध्ययन अध्यापन गराउनु आवश्यक रहेको बताउँदै सांसद सुवालले नयाँ पुस्तालाई सम्पदाको महत्वबारे छलफल र अध्ययनमा संलग्न गराउन सके पुर्खाका धरोहर हजारौं हजार वर्षसम्म जीवित रहीरहने धारणा व्यक्त गरे । काठमाडौं उपत्यका भूकम्पीय जोखिम क्षेत्र भएको हुँदा भूकम्पबाट क्षति न्युन हुने प्राविधि अहिले सबैभन्दा महत्वपूर्ण पक्ष भएको उनले बताए ।

बसाइँसराइँले जोखिम बढाइरहेको हुँदा देशको सन्तुलित विकास गर्न देशका सबै पालिकामा सरकारले भूकम्पीय जोखिम न्युन हुने प्राविधि सहित आवास विस्तार गराउने र बसाइसराइ जिल्ला भित्रमात्र सीमित गर्ने व्यवस्था गराउन सके क्षति न्युनीकरण हुने बताए ।

जनप्रतिनिधिहरुले आ–आफ्नो निर्वाचन क्षेत्रको सन्तुलित विकास गर्नेतर्फ जोड दिनुपर्ने धारणा राख्दै उनले उपत्यकामा निर्माण भइरहेको फास्ट ट्र्याक, सुख्खा बन्दरगाह, खानेपानी व्यवस्थापन, सडकको लागि खरबौं रकम खर्च भइरहेकोमा सो बजेट देशको शिक्षा र स्वास्थ्य क्षेत्रमा लगानी भएको भए धेरै उपलब्धी हुने बताए ।

अमानत वा उपभोक्ता समितिबाट भएको विकास निर्माणका काम दिगो र जनताको अपनत्व कायम हुने बताउँदै सांसद सुवालले सरकारले सचेत भएर स्थानीय जनता, स्थानीय तह र स्थानीय जनप्रतिनिसँग समन्वय गरेर मात्र सम्पदा संरक्षणको कामलाई अगाडि बढाउन अनुरोध गरे ।

भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले सम्पदाको मौलिकता संरक्षणको लागि संस्कृति मन्त्रालय, पुरातत्व विभाग र स्थानीय तह एक भएर लाग्नु आवश्यक भएको बताए । नेपाल आउने विदेशी पर्यटकहरुमध्ये करिब २५ प्रतिशत विदेशी पर्यटकहरुले भक्तपुर भ्रमण गर्ने गरेको तथ्याङ्क रहेको उल्लेख गर्दै उनले गएको आ.ब. मा सार्क र गैरसार्क मुलुकका गरी जम्मा २ लाख ४६ हजारभन्दा बढी पर्यटकहरुले भक्तपुर भ्रमण गरेको र चालु आ.ब. को बितेको ९ महिनामा सार्क र चीनका गरी ८१,८४४ र गैर सार्क देशका १,०३,७०४ गरी १ लाख ८५ हजार ५४८ जनाले भक्तपुर भ्रमण गरिसकेको तथ्यांक प्रस्तुत गरे ।

सम्पदा संरक्षणले देशको पर्यटन उद्योगलाई थप टेवा पुऱ्याउने विश्वास व्यक्त गर्दै प्रमुख प्रजापतिले भक्तपुरको मौलिकता बचाइराख्न मौलिक शैलीमा घर निर्माण गर्ने घरधनीहरूलाई अनुदानको व्यवस्था पनि नगरपालिकाले गर्दै आएको अवगत गराए । प्रमुख प्रजापतिले भक्तपुरको मौलिकता बचाइराख्न पुरानो शहरको सिमाङ्कन गरी यहाँको घरजग्गा स्थानीय जनताबीच मात्रै किनबेच गर्न सकिने नीति निर्माण गरेकोमां सर्वोच्च अदालतले रोकपछि त्यसबाट पछि हट्नु परेको जानकारी दिए । विश्व सम्पदामा सूचिकृत सम्पदाको संरक्षण गर्ने हो भने राज्यले नै संरक्षणको लागि विशेष कानुन निर्माण गर्नु आवश्यक रहेको धारणा व्यक्त गरे ।

काठमाडौं महानगरपालिकाका प्रमुख सुनिता डंगोलले भक्तपुरको सम्पदा पुनःनिर्माण सबैको लागि उदाहरणीय रहेको चर्चा गर्दै सम्पदा संरक्षणमा तीन तहका सरकारहरुबीच समन्वय र सहकार्य गरेर अगाडि बढ्नुपर्नेमा जोड दिइन् । हाम्रो सम्पदाप्रति हामीले गर्व गर्ने ठाउँ बनाउनुपर्नेमा जोड दिँदै उपप्रमुख डंगोलले काठमाडौं महानगरपालिकाले सम्पदा पुनःनिर्माणमा मौलिक स्वरुपलाई विशेष प्राथमिकतामा राखी काम गर्दै आएको जानकारी दिइन् ।

चाँगुनारायण नगरपालिकाका प्रमुख जीवन खत्रीले भक्तपुर नपाले सम्पदा संरक्षणमा गरेको कार्यको सबै स्थानीय तहले अनुशरण गर्नुपर्ने बताउँदै भूकम्पको १ दशक पुनःनिर्माण कार्यको यात्रा सिकाइ उपलब्धी पनि भएको बताए ।

कार्यक्रममा नेपालका लागि युनेस्कोका प्रतिनिधि जाको डुटइटले २०७२ को भूकम्पबाट क्षति पुगेका सम्पदा संरक्षण र जिर्णोद्धारमा नेपालले उल्लेखनीय कार्य गरेको बताए । उक्त कार्यक्रममा संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयका सचिव विनोदप्रकाश सिंहले धन्यवाद ज्ञापन गरेको थियो ।

सोही क्रममा २०७२ सालको विनाशकारी भूकम्पले क्षति पुगेका सम्पदाहरुको जिर्णोद्धार तथा पुनःनिर्माणसम्बन्धी जानकारी दिने उद्देश्यले फोटो प्रदर्शनी गरिएको थियो । साथै सोही अवसरमा आयोजित चित्रकला प्रतियोगिताका विजेताहरुलाई पुरस्कार प्रदान गरिएको थियो ।

## नेपाल....

स्वास्थ्य मन्त्री पौडेल र नगरप्रमुख सुरेन्द्र श्रेष्ठले संयुक्त रूपमा अस्पताल परिसरमा बनेको नयाँ भवनमा ब्लड बैंकको शुभारम्भ गरे । नगरप्रमुख श्रेष्ठले एक महिनाभित्र पूर्ण क्षमतामा सञ्चालनमा आउने ब्लड बैंकले नगरवासी र आसपासका क्षेत्रका नागरिकलाई आपतकालीन रक्त सेवामा ठूलो सहयोग पुग्ने विश्वास व्यक्त गरे ।

अस्पतालका मेडिकल डाइरेक्टर डा. डिके रोशनले अस्पतालले चालु आर्थिक वर्षको नौ महिनामा गरेको सेवा प्रवाहको विस्तृत तथ्यांक प्रस्तुत गर्दै अस्पतालले विगत एक वर्षमा गरेका प्रगति विवरण प्रस्तुत गरे । सो अवधिमा अस्पतालले १ लाख ५० हजारभन्दा बढी बिरामीलाई ओपिडी सेवा, ३ हजार १ सय १८ जनालाई आइपीडि सेवा, ७० हजार प्रयोगशाला परीक्षण, १५ सय ५१ सिटि स्क्यान लगायतका महत्त्वपूर्ण सेवा प्रदान गरेको जानकारी गराए । आर्थिक पाटोलाई हेर्दा अस्पतालले ३९ करोड २९ लाख रुपैयाँ आम्दानी गरेको र ३३ करोड ७७ लाख रुपैयाँ खर्च गरेको बताए ।

नगरप्रमुख सुरेन्द्र श्रेष्ठले स्वास्थ्य क्षेत्रलाई नगरपालिकाले उच्च प्राथमिकता दिएको बताउँदै अस्पतालको विकासका लागि निरन्तर सहयोग गर्ने प्रतिबद्धता व्यक्त गरे । नेकपा (माओवादी केन्द्र) का युवा नेता दिलीप कुमार प्रजापतिले अस्पतालको गुणस्तरीय सेवाको प्रशंसा गर्दै छिमेकी जिल्लाका नागरिकले समेत यहाँबाट लाभ लिइरहेको उल्लेख गरे । नेपाली कांग्रेसका नगर सभापति हरिदास प्रजापतिले स्वागत मन्तव्य दिएका थिए ।

कार्यक्रममा अस्पतालको आर्थिक अवस्था सुधार भएको र तलब भुक्तानी सहज भएको जानकारी डा. रोशनले गराए । कोरिया सरकारको १ अर्बभन्दा बढीको सहयोगमा अस्पतालको नयाँ सुविधासम्पन्न भवन निर्माण कार्य तीव्र गतिमा अघि बढिरहेको पनि जानकारी दिइयो । स्वास्थ्य मन्त्रीको प्रशंसा र स्थानीय सरकारको सक्रियताले नेपाल कोरिया मैत्री नगरपालिका अस्पताल आगामी दिनमा अझ उत्कृष्ट सेवा प्रदान गर्न सक्षम हुने विश्वास लिइएको छ । कार्यक्रममा रक्तदान कार्यक्रमको समेत आयोजना गरिएको थियो ।

## थिमिका....

मापदण्ड पूरा नगरेका पसलहरुमाथि दस हजारदेखि दुई हजार पाँच सयसम्मको नगद जरिवाना कारबाही गराइएको छ ।

अनुगमनका क्रममा मध्यपुर थिमिका चार र सूर्यविनायक एक वटा गरी कुल पाँच वटा पसलहरुमा अनुगमन गरिएको थियो । एउटा पसललाई अनुज्ञापत्र लिएर मात्रै मिठाई प्याकिंग गर्न, ३० दिनभित्र अनुज्ञापत्र लिएर उद्योग तथा बाणिज्य कार्यालय भक्तपुरमा उपस्थित हुन निर्देशन दिएको जनाइएको छ ।

नगद कारबाहीमा परेका चारमध्ये सवैभन्दा वढी मध्यपुर थिमि शंखधरचोकका दुई वटा पसलहरु छन् । ति दुवैमाथि दसदस हजार नगदसहित कारवाही गरिएका छन् । नयाँ थिमिस्थित शंखधर मिठाई पसल र धनुषा मिठाई पसललाई प्रति पसल दसदस हजार नगदसहितको कारबाही गरिएका हुन् ।

शंखधर मिठाई पसलमा मूल्यसूचि राख्नुपर्ने, उत्पादित मिठाइहरुमा उत्पादन मिति, म्याद गुज्रने मिति र मूल्य खुलाई राख्नुपर्ने, सरसफाईमा ध्यान दिनुपर्ने, करचुक्ता समयमै गर्नुपर्ने, अनुज्ञापत्र लिएर मात्रै मिठाई प्याकिंग गर्नुपर्ने, स्थानीय निकायमा फर्म दर्ता गर्नुपर्ने कारवाही तथा निर्देशन दिइएको छ । साथै अन्दाजी तीन हजार पाँच सय रकम बराबरको खुवाजन्य पदार्थ जफत गरी नष्ट गरिएको जनाइएको छ । उता धनुषा मिठाई पसललाई दस हजार नगदसहित अन्दाजी करिव पाँच हजार बराबरको मिठाई तथा खुवाजन्य पदार्थ जफत गरी नष्ट गरिएको जनाइएको छ । साथसाथै विभिन्न निर्देशनहरु दिइएको पनि जनाइएको छ ।

अनुगमन गरिएका कुल पाँचमध्ये नयाँ थिमि भाटभटेनीस्थित राधेराधे स्वीट्सलाई मात्रै नगदसहितको कारबाही गरिएको छैन । यसबाहेक मध्यपुर थिमि नगरपालिकाको गुप्ता एण्ड स्वीट्स हाउसलाई पाँच हजार नगदसहित विभिन्न निर्देशनहरु दिइएका छन् ।

अनुगमनमा उद्योग तथा वाणिज्य कार्यालय, राष्टिय उपभोक्ता मञ्च भक्तपुर तथा सरोकारवाला निकायका प्रतिनिधिहरु सहभागी थिए ।

## सफल....

रोगका कारण बिरामी हुने गरेको भन्दै सबैले आफ्नो स्वास्थ्यलाई मध्यनजर गरी खानपिनमा ध्यान दिनुपर्ने तथा स्वस्थ जीवनशैली अपनाउनुपर्नेमा जोड दिए ।

उद्योग तथा वाणिज्य कार्यालय भक्तपुरका कार्यालय प्रमुख रामप्रसाद कुस्माले महिला उद्यमीहरुको लागि सञ्चालित ई कमर्श तालिम अवश्य पनि फलदायी हुनेमा विश्वास व्यक्त गरे । कार्यालयको आ.व. २०८१/८२ को वार्षिक स्वीकृत कार्यक्रमअन्तर्गत भक्तपुर उद्योग वाणिज्य संघसँगको सहकार्यमा उद्यम गरिरहेका र भविष्यमा उद्यम गर्न चाहने महिलाहरुको लागि ई कमर्श तालिम आयोजना गरिएको जानकारी दिँदै आगामी दिनमा संघसँग सहकार्य गरी युवा, महिला लक्षित अन्य सिपमूलक तथा उद्यमशीलता विकासका तालिमहरु सञ्चालन गर्ने बताए ।

भक्तपुर उद्योग वाणिज्य संघकी अध्यक्ष रोशनीमैयाँ धौबन्जाले ई कमर्श तालिमबाट सिकेका ज्ञान र सिपलाई तालिममा मात्र सीमित नगरी आफ्नो व्यापार व्यवसायको प्रवर्द्धन र विकासमा प्रयोग गर्नुहुन आग्रह गरिन् । उनले तालिममा सहभागी महिला उद्यमीहरुले ई कमर्श तालिमबाट सिकेका ज्ञानलाई प्रयोग गरेमा व्यापार व्यवसायको अभिवृद्धिमा सहयोग पुग्ने विश्वास व्यक्त गरिन् ।

नेपाल उद्योग वाणिज्य महासंघ बागमती प्रदेशको साना तथा मझौता उद्योग समितिकी सभापति लक्ष्मी खनाल, नेपाल पत्रकार महासंघ जिल्ला शाखा सभापति सुन्दर शिल्पकार, भक्तपुर उद्योग वाणिज्य संघका कोषाध्यक्ष विश्वराम दुवाल, कार्यसमिति सदस्य एवं तालिम तथा सिप विकास उपसमितिका संयोजक पृथ्वीभक्त प्रजापतिले तालिमबाट सहभागी महिला उद्यमीहरुको प्रविधिसम्बन्धी व्यवसायिक दक्षता एवं क्षमता वृद्धि भएको विश्वास गर्दै सिकेका ज्ञानको भरपूर फाइदा उठाउन आग्रह गरे ।

प्रशिक्षार्थीहरुको तर्फबाट सजिना प्रजापति र रजनी श्रेष्ठले ई कमर्श तालिम आजको युगमा एकदमै महत्वपूर्ण रहेको भन्दै आफूहरुले धेरै ज्ञान हासिल गरी लाभ प्राप्त गरेको बताइन् ।

यसैबीच, प्रमुख अतिथि स्वास्थ्यमन्त्री थापा लगायत अन्य अतिथिहरुले तालिममा सहभागीहरुलाई प्रमाणपत्र वितरण गरेका थिए ।

वर्ष १८ अङ्क ३५ २०८२ बंशाख १७ गते बुधबार
30 April 2025, Wednesday
इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# २२५ वर्षअघिको कथामा आधारित चलचित्र "जार"

काठमाडौं । चलचित्र 'जार' यही वैशाख २६ गतेदेखि प्रदर्शन हुँदैछ । 'जार' विषय र प्रस्तुतिका हिसाबले केही फरक रहेको निर्माणपक्षले जनाएको छ । 'जार' २२५ वर्ष अगाडिको कथामा आधारित रहेर बनेको सिनेमा हो । यो विषय अहिले पनि यदाकदा अस्तित्वमा छ । तर, अहिले 'जार' प्रथा धेरै प्रचलनमा छैन ।

सन् १८ सयको दशकमा नेपाली समाजमा घटेको यथार्थ घटनामा आधारित सिनेमा हुनेछ, 'जार' । 'जार' साहित्यकार इन्द्रबहादुर राईको ऐतिहासिक कथामा आधारित सिनेमा हो ।

इन्द्रबहादुर राईले सन् १८ सयको दशकको विषयलाई आफ्नो कथाको विषय बनाएका थिए । त्यसैले सोही विषयमा 'जार' निर्माण गरिएकाले यो २२५ वर्ष पुरानो विषयको कथा भन्न मिल्ने निर्देशक फूर्वा छिरिङ लामाको भनाइ छ ।

यो चलचित्रले हाम्रो इतिहाससँगको साक्षात्कार गराउनुका साथै समाजमा हराउँदै गएका परम्परा र सम्बन्धका विविध पाटा देखाउने लामाले बताए । "मैले सानैदेखि सुन्दै आएको यो कथाले सधैं झक्झकाइ रहन्थ्यो । नेपाली समाजमा जस्तै नेपाली भाषी समुदायमा जहाँसुकै गए पनि एउटै भावना पाइन्छ," निर्देशक लामाले भने । "'जार'ले हाम्रो समाजको भोगाइ, निर्दोषता र त्यतिबेला प्रचलित मितेरी साइनोलाई समेत उजागर गर्छ ।" 'जार'ले इतिहास, संस्कृति र समाजलाई गहिरो रुपमा स्पर्श गर्ने भएकाले युवा पुस्तामाझ समेत प्रभाव पार्ने विश्वास निर्देशक लामाको छ । उनी भन्छन्, 'हालका पुस्तामा यो विषय केही ओझेलमा परे पनि, त्यसबेलाको समाजमा यसको ठूलो प्रभाव थियो । चलचित्र 'जार' केवल इतिहास सुनाउने माध्यम मात्र होइन, हाम्रो संस्कृतिको अदृश्य धागो भेटाउने प्रयास पनि हो ।'

चलचित्र 'जार'ले एक प्रेमकथामार्फत तत्कालीन समाजको संरचना र मानव भावनाको जटिलतालाई देखाउनेछ । कथाका पात्र 'ठूली' र 'रुद्रमान' मार्फत दर्शकले त्यसबेला प्रेम, सम्बन्ध र समाजको कठोर वास्तविकता देख्न सक्नेछन् । चलचित्रमा देखाइने 'मितेरी साइनो' जस्ता सामाजिक परम्पराहरु अहिलेका नयाँ पुस्ताले थोरै मात्रै बुझेका छन् । 'जार'ले आजका दर्शकलाई पुरानो समाज र आजबीचको गहिरो सम्बन्ध बुझ्न मद्दत पुऱ्याउनेछ ।

फेरि टेल पिक्चर्सले निर्माण गरेको 'जार' सामाजिक विषयमा बने पनि कम्प्लिट प्याकेज भएको निर्देशक लामाको दाबी छ । त्यसैले 'जारी'ले दर्शकको मन जित्नेमा उनी ढुक्क छन् । चलचित्र 'जार'मा सौगात मल्ल, अनुपविक्रम शाही, अभिनेत्री गीताञ्जली थापालगायत कलाकारको मुख्य भूमिका छ ।

होप रिल्स, एलए सेभेन सर्टस, बराल स्टुडियो र किवा प्रोडक्सनको सहकार्यमा निर्माण भएको चलचित्रको छायांकन सिक्किममा गरिएको छ । चलचित्र 'जार'को कार्यकारी निर्मातामा त्रिलोचन पाण्डे, नीरज राई, नुर्साङ भुटिया, ज्योती क्षेत्री र पेमा रिन्जिङ लेप्चा छन् ।

सरवानन इलावार्सुको छायांकन रहेको चलचित्रमा अखिलेश राईको सम्पादन छ । सिनेमामा झुमा लिम्बू र गंगा थापाको संगीत छ । चलचित्र 'जार' नेपाल र भारतसहित अन्तर्राष्ट्रिय बजारमा एकसाथ प्रदर्शनमा आउने निर्माण टिमले बताएको छ । यो सिनेमा प्रदर्शनको लागि नेपालभित्र एप्पल इन्टरटेन्मेन्ट, रीच इन्टरटेन्मेन्ट र एफडी कम्पनिले वितरणको जिम्मा लिएको छ भने अन्तर ाष्ट्रिय वितरकको रूपमा सेभेन सिज सिनेमाले गर्ने छ ।

# "कुलमान घिसिङको निमन्त्रणामा सुस्मिता र टिमको विशेष भेट

काठमाडौं । नेपालका चर्चित इमानदार राष्ट्रसेवक तथा वर्तमान नेपाल विद्युत प्राधिकरणका निवर्तमान कार्यकारी निर्देशक कुलमान घिसिङसँग गायिका सुस्मिता स्याङतान र उनको टिमबीच विशेष भेटवार्ता सम्पन्न भएको छ । शुक्रबार घिसिङकै विशेष निमन्त्रणामा स्याङतान र उनको टिम घिसिङको निवासमा पुगेका थिए।

गायिका स्याङतानले केही समयअघि कुलमान घिसिङप्रति श्रद्धा व्यक्त गर्दै आफ्नै युट्युब च्यानलमार्फत 'कुलमानलाई फालेर' शीर्षकको देशभक्तिपूर्ण गीत सार्वजनिक गरेकी थिइन्। उक्त गीत छोटो समयमा युट्युब तथा सामाजिक सञ्जालमा व्यापक चर्चित बनेको छ । भेटका क्रममा कुलमान घिसिङले गीतप्रति गहिरो सराहना गर्दै स्याङतानलाई धन्यवाद दिएका थिए। उनले भने, "देशको सकारात्मक सोच र सेवामा आधारित यस्ता सिर्जनाले अझै म जस्ता राष्ट्रसेवकलाई ऊर्जा र प्रेरणा दिन्छ।" साथै, उनले स्याङतानलाई भविष्यमा अझ उत्कृष्ट सिर्जना गर्न शुभकामना पनि व्यक्त गरे।

त्यस अवसरमा गायिका स्याङतानले प्रत्यक्ष रूपमा 'कुलमानलाई फालेर' गीत घिसिङलाई सुनाएकी थिइन्। गीत प्रस्तुतिमा घिसिङ भावुक बनेका थिए। स्याङतानले भेटमा भावुक हुँदै भनिन्, "उहाँबाट यति सकारात्मक प्रतिक्रिया र शुभकामना पाउनु मेरो जीवनकै सबैभन्दा गौरवपूर्ण क्षण हो। म उहाँजस्तै इमानदार राष्ट्रसेवकहरूलाई देशको नेतृत्वमा देख्न चाहन्छु।"

त्यसै क्रममा स्याङतानले आफूलाई गीत सिर्जनाको प्रेरणा कसरी मिल्यो भन्ने विषयमा समेत प्रसंग सुनाइन्। उनले भनिन्, "जब मैले उहाँको बर्खास्तीको दिन मकवानपुरको राक्सिराङ गाउँपालिका-९ स्थित चेपाङ बस्तीमा ७० वर्षीया तुलकुमारी चेपाङको घरमा विद्युत् मिटर 'अन' गर्दै बत्ती बालाएको फोटो देखें, म अत्यन्तै भावुक भइकन रोए। त्यसपछि नै उहाँको सम्मानमा एउटा गीत बनाउने दृढ निश्चय गरेको थिएँ।" त्यहि प्रसंग सुनाउदा स्यन्तान निकै भावुक बनिन। भेटमा पुगेका गयिकासहित आठैजनाले आशु थाम्न सकेनन ।

उक्त भेटमा गायिका सुस्मिता स्याङतानसँगै 'लेडी र्यापर' का रुपमा उदाउँदै गरेकी मन्जली तामाङ, उज्यालो नेटवर्कका मल्टिमिडिया प्रमुख इशारा लामा, समाचार प्रमुख विवेक लोप्चन, सिर्जना तामाङ, गायक मंगले तामाङ, गायिका मिना तामाङ, एरेन्जर एवं गायक कुनसाङ दोर्जे लोप्चन पनि सहभागी थिए। भेटको क्रममा घिसिङले आफ्नो निःस्वार्थ सेवाका संघर्षपूर्ण यात्राका केही अविस्मरणीय क्षणहरू पनि सबैसँग साझा गरेका थिए, जसले उपस्थित सम्पूर्ण टोलिलाई निकै प्रेरित बनाएको थियो।

गायिका स्याङतानको 'कुलमानलाई फालेर' गीतमार्फत उनले केवल कुलमान घिसिङजस्ता कर्मशील र इमानदार व्यक्तिहरूप्रति सम्मान मात्र व्यक्त गरेकी छैनन्, वर्तमान नेपालको नेतृत्वप्रति आम नागरिकले राखेको अपेक्षा र आक्रोशलाई समेत कलात्मक ढङ्गमा अभिव्यक्त गरेकी छन्।

गीतमा सशक्त आवाज दिएकी स्याङतानलाई शब्द, संगीत र सिर्जना विवेक लोप्चनले उपलब्ध गराएका हुन् भने संगीत संयोजन कुनसाङ दोर्जे लोप्चनले गरेका छन्। सहयोगी स्वरमा अर्जुन न्यौपानेले साथ दिएका छन्। भिडिओ निर्देशन र छायांकन विशाल सापकोटाले गरेका छन् भने सम्पादन तथा रंग संयोजन त्रिलोक लामाले गरेका छन्, जसले गीतको दृश्य पक्षलाई अझ प्रभावशाली बनाएको छ। गीतले छोटो समयमा नै उल्लेखनीय चर्चा बटुल्न सफल भएको छ र देशप्रेम तथा इमानदारीको सन्देश बोकेको यो सिर्जना सँगै गायिका सुस्मिता स्याङतानको सांगीतिक यात्रा अझै उचाइमा पुगेको देखिन्छ।

# भारतीय अभिनेत्री तथा नृत्याङ्गना नोरा फतेही नेपाल आउने

काठमाडौं- भारतीय अभिनेत्री तथा नृत्याङ्गना नोरा फतेही नेपाल आउने भएकी छिन् । शिक्षाबाट वञ्चित बालबालिकाको क्षेत्रमा काम गर्दै आएको सामाजिक संस्था 'ह्युमन रेस्पेक्ट नेपाल'को सहयोगार्थ आयोजना हुने च्यारिटी कार्यक्रमका लागि अभिनेत्री फतेही नेपाल आउन लागेको आयोजक वर्ल्डवाइड फिल्मस् नेटवर्क प्रालिका अध्यक्ष देव मगरले बताए ।

उनले भने, "मनोरञ्जनमार्फत सामाजिक कार्यलाई सहयोग गर्ने उद्देश्यले हामीले यो कार्यक्रम गर्न लागेका हौं, नेपालमा अभिनेत्री फतेहीको माग देखेर हामीले कार्यक्रमका लागि गरेको अनुरोधमा उहाँ सहमत हुनुभएको हो ।" उनले आगामी वर्ष विसं २०८२ को ३ जेठमा बौद्धस्थित हायातको चौरमा 'नोरा फतेही लाइभ इन नेपाल' शीर्षकमा कार्यक्रम आयोजना हुने बताए । नेपाल आउन र नेपालीलाई भेट्न आफू उत्साहित रहेको अभिनेत्री फतेहीले बताएकी छिन् ।

उनले एक श्रव्यदृश्य सन्देशमार्फत आफू पहिलो पटक नेपाल आउने र यहाँबाट अहिलेसम्म प्राप्त गरिरहेको मायाका लागि धन्यवाद व्यक्त गर्दै आफ्नो प्रस्तुति दिने बताएकी छिन् । "म काठमाडौँ आउन उत्साहित छु, यो मेरो पहिलो भ्रमण हुनेछ, सामाजिक कार्यका यो कार्यक्रमलाई सफल बनाउन सबैलाई आग्रह गर्दछु", अभिनेत्री फतेहीले श्रव्यदृश्यमा भनेकी छिन् ।

इभेन्टको व्यवस्थापन मनु मिडिया प्रालिले गर्नेछ । कार्यक्रमका लागि भारतको मुम्बईबाट अभिनेत्री फतेहीसहित २० बढी नृत्याङ्गना प्रस्तुति दिन नेपाल आउने आयोजकले जनाइएको छ । अभिनेत्री फतेहीको 'दिलबर दिलबर', 'कुसु कुसु', 'ओ साकी साकी', 'नाच मेरी रानी', 'स्नेक डान्स' लगायतका गीत भारतसँगै नेपालमा पनि लोकप्रिय छन् ।

# 'के घर के डेरा : घर नं २'मा को हुन् घरभेटी र डेरावाल ?

काठमाडौं । नेपाली चलचित्र उद्योगमा 'पशुपतिप्रसाद', 'आमा', 'चिसो मान्छे'जस्ता सोसल ड्रामामा सफल चलचित्र दिएका निर्देशक दीपेन्द्र के खनालको नयाँ चलचित्र 'के घर के डेरा : घर नं २' प्रदर्शनको तयारीमा छ । जेठ २ गतेदेखि प्रदर्शनमा आउने चलचित्रले घर र डेराको कथा भन्नेछ । घर र डेरोबीचको फरक बसाइले पारेको प्रभावको कथा भन्नेछ । घर र डेराका कारण समाजले जबरजस्त निर्धारण हुने सोसल स्टाटसको कथाव्यथाबारे बोल्नेछ ।

घर र डेरा कै कारण जतिसुकै उचनिच व्यवाहार भए पनि अन्ततः त्यसको प्रभाव जीवनको अन्त्यमा के पर्छ यसबारे पनि 'के घर के डेरा : घर नं २'ले भन्ने निर्देशक खनालले भने । र र डेराको कथा भन्दा सिनेमामा को हो डेरावाल र को हो घरभेटी ? चलचित्रमा खगेन्द्र लामिछाने, निश्चल बस्नेत, उपासना सिंह ठकुरी, आर्यन सिग्देल, केकी अधिकारी, प्रकाश घिमिरेलगायत कलाकार मुख्य भूमिकामा छन् । यी मध्ये चलचित्रमा को घरभेटी र को डेरावाल हुन् ?

पोस्टरमा सबैको उस्तैउस्तै लुक्स छ । तर, एउटा पोस्टरमा खगेन्द्र साइकल डोर्याइरहेका छन् । टिजरले पनि खगेन्द्रलाई दुखी पात्र देखाएको छ । त्यसैले खगेन्द्र डेरावाल हुन् कि भन्ने सामान्य अनुमान लगाउन सकिन्छ । यदि, उनी डेरावाल हुन् भने घरभेटी आर्यन हुन् कि निश्चल यसबारे निर्देशकले केही जानकारी दिएका छैनन् । निर्देशक दीपेन्द्र के खनालले 'के घर के डेरा : घर नं २' सिक्वेल नभएको बताए पनि कथा घर र डेराको रहेको बताउँछन् । सिनेमाको कथा साहित्यकार बुद्धिसागरले लेखेका छन् । उनको यो पहिलो सिनेमा हो ।

चलचित्र एप्पल इन्टरटेन्मेन्ट, ए प्लस इन्टरटेन्मेन्ट तथा नटराज क्रिएसनको प्रस्तुतिमा निर्माण भएको हो । कृष्णबहादुर थापाको सिनेमामा छायांकन रहेको छ । 'के घर के डेरा : घर नं २'को निर्मातामा नकिमउद्दिन, शरद श्रेष्ठ र किरण महर्जन छन् । कार्यकारी निर्माताको रूपमा युवराज कार्की छन् ।











प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ३६ ने.सं. ११४५ बछलाथ्व दशमी बैशाख २४ गते बुधबार, २०८२ 07 May 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## सरकारको नजरमा उत्कृष्ट रहेको सरकारको नीति तथा कार्यक्रम प्रतिपक्षको लागि निराशामुखी



काठमाडौं । प्रतिनिधि सभा र राष्ट्रिय सभाको ग्रीष्मकालीन अधिवेशन अर्थात वजेट अधिवेशन शुरु भएको छ । सरकारले मन्त्री परिषद्को सिफारिसमा राष्ट्रपतिद्वारा सरकारको आगामी आर्थिक वर्ष २०८२-८३ को वार्षिक नीति तथा कार्यक्रम प्रस्तुत गराउने कार्यक्रम अन्तर्गत सरकारको नीति तथा कार्यक्रम संघीय संसदको दुवै सदनमा पेश भइसकेका छन् । अब सरकारले यही नीति तथा कार्यक्रमको परिधिमा रहेर आगामी वर्षको आय व्ययको बजेट निर्माण गरी संसदमा पेश गर्ने कार्यक्रम रहेको छ । सरकारले बजेट यही जेठ महिनाको १५ गते सघीय संसदको दुवै सभामा प्रस्तुत गर्नेछ। यस अघि प्रतिनिधिसभाको सोमबारको बैठकमा सभामुख देवराज घिमिरेले नेपाल सरकारको वार्षिक नीति तथा कार्यक्रमका विभिन्न बुँदाहरूमा ३७ वटा संशोधन प्रस्ताव आएको जानकारी दिएका छन् ।

संसद्मा प्रस्तुत भएको सरकारको वार्षिक नीति तथा कार्यक्रममाथि सत्तारुढ दल नेपाली कांग्रेसकै सासदहरुले समेत असन्तुष्टी जनाइरहको छ । तर कांग्रेसका शिर्ष नेताहरु भने बर्तमान सरकारले ल्याएको नीति तथा कार्यक्रमका बारेमा मौन नै रहेको अवस्था छ भने नेकपा एमालेले सरकारको नीति तथा कार्यक्रमलाई अहिले सम्मकै उत्कृष्ट नीति तथा कार्यक्रम रहको र अब नेपालको विकासमा कायापलट हुने र समृद्ध नेपाल बन्ने दाबी गरिरहेको छ । यसमा संसदमा प्रतिपक्षको रुपमा रहका दलहरुले भने सरकारको नीति तथा कार्यक्रम पुरानो बाटलमा नयाँ लेबल लगाएको भनी आलोचना गरेका छन् । यसरी संसदमा परेका संशोधनहरूमाथि सोमबारदेखि नै छलफल शुरु भएको छ । जसमा प्रतिपक्ष सांसदहरूले असन्तुष्टि जनाएका छन् । नीति तथा कार्यक्रमले वर्तमान समस्याको समाधान गर्न नसकेको मात्र नभई भविष्यप्रतिको स्पष्ट दृष्टिकोणसमेत नबोकेको टिप्पणी गरेका छन् । उनीहरुले स्पष्ट योजना र दूरदृष्टिको अभाव, समावेशीता सामाजिक न्याय र सुशासनप्रतिको कमजोर प्रतिबद्धता, निराशाजनक र पश्चगामी शैली, कार्यान्वयन पक्षको अपूर्णता र अस्पष्टता, सङ्घीयता र स्रोत व्यवस्थापनप्रति बेवास्ता, भ्रष्टाचार र अनियमितता सम्बोधनमा उदासीनतालगायतका टिप्पणी गरेका हुन् ।

संशोधन प्रस्ताव राख्दै सांसदहरूले यो नीति तथा कार्यक्रमले विद्यमान समस्यालाई समाधान गर्न प्रयास नगरेको, पुरातनवादी र पश्चगमन शैलीलाई प्रश्रय दिएको, नागरिकको विकास र समृद्धिको आकांक्षा पूरा गर्न नसकेको, शिक्षा स्वास्थ्यजस्ता मौलिक हक कार्यान्वयनका लागि स्पष्टता ल्याउन नसकेको विषयहरू औंल्याए । नीति तथा कार्यक्रममाथि संशोधन प्रस्ताव राख्दै सांसद सुदन किरातीले सरकारले जनताको अपेक्षाअनुसार काम गर्न नसकेको बेला नीति तथा कार्यक्रममासमेत कुनै स्पष्ट योजना नआएको बताए । सरकारमा रहेका मन्त्रीहरूको सम्पत्ति सार्वजनिक हुन नसकेको विषय पनि उनले संसदमा उठाए ।

त्यस्तै, वित्तीय कारबाही कार्यदलको खैरो सूचीबाट कसरी बाहिर निकाल्ने भनेर स्पष्ट कार्ययोजना आउन नसकेको उनको भनाइ छ । गुणस्तरीय स्वास्थ्यको पहुँच विस्तार गर्ने विषयमा नीति तथा कार्यक्रमले कुनै विषय नसमेटेको सांसद किरातीले बताए । सरकारी शिक्षाको गुणस्तर बढाउने बारेको विषय पनि नीति तथा कार्यक्रममा नपरेको, कृषि क्षेत्रमा प्रभावकारी कार्यक्रम पर्न नसकेको पनि सांसद किरातीले बताए । कृषिजन्य उत्पादनको बजारको प्रत्याभूति गरिनुपर्ने, नेपाली रैथाने ज्ञान र सीपमा आधारित उद्यमशीलता प्रवर्द्धन गर्नेगरी नीति तथा कार्यक्रम आउनुपर्ने उनको भनाइ छ ।

सांसद जनार्दन शर्माले संसद्मा पेस भएको वार्षिक नीति तथा कार्यक्रमको बुँदा नम्बर 'क' देखि 'ट' सम्म हटाउनुपर्ने बताए । सामाजिक न्यायका लागि विभेद अन्त्य गर्ने, श्रमयोग्य जनशक्तिलाई तालिम तथा उद्यमशीलता प्रवर्द्धन पर्ने, प्राकृतिक स्रोतसाधनको प्रयोग बढाउने, प्रविधिमा आधारित अर्थतन्त्रलाई जोड

बाँकी पेज ७ मा

## काक्राबारीको अबैध प्लटिंग रोक्न सिडिओको निर्देशन



भक्तपुर । भक्तपुर जिल्लाको अति विकट स्थानको रुपमा चिनिएको सूर्यविनायक नगरपालिका-९ वडा स्थित काँक्राबारीमा अनधिकृत रूपमा जग्गा प्लटिङको कार्य भइरहेको पाइएको छ । जिल्ला प्रशासन कार्यालय भक्तपुरले गत आइतबार साँझ गरेको अनुगमनमा क्रममा बिनास्वीकृति ४५० रोपनी क्षेत्रफलमा प्लटिङ भइरहेको पाइएपछि सो कार्य रोक्न प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्यालले निर्देशन दिएको छ ।

तत्कालका लागि काम रोकेर यस क्षेत्रमा के कस्तो क्षति भएको यकिन गरी प्रतिवेदन

बाँकी पेज ७ मा

## आगजनीमा परेको सञ्चो उद्योगले थाल्यो उत्पादन



काठमाडौं । गत चैत्र १५ गते राजावादीहरुको हिसाँत्मक आन्दोलनका क्रममा प्रदर्शनकारीले व्यक्तिगत सम्पत्ति, व्यापारीक प्रतिष्ठान र सरकारी उद्येँगमासमेत तोडफोड र आगजनी गर्ने क्रममा खरानी भएको जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लिमिटेडको उत्पादन झण्डै एक महिनापछि सुरु भएको छ ।

आगजनीलगत्तै महाप्रबन्धक डा. संगीता यादवको कार्यकाल सकिएपछि सञ्चालनमा प्राविधिक र प्रशासनिक समस्याका कारण कम्पनीको उत्पादन शुक्रबारबाट मात्र शुरु भएको कार्यवाहक महाप्रबन्धक उषा रिजाल जोशीले जानकारी दिइन् ।

तीनकुनेमा भएको प्रदर्शनका क्रममा आन्दोलनकारीले आगजनी गर्दा उत्पादन शाखामा पूर्ण क्षति भएको थियो भने अन्य शाखामा ढुङ्गामुढा गर्दा आंशिक क्षति पुगेको थियो । आगजनीको

बाँकी पेज ७ मा

## सूचना प्रवाहमा मध्यपुर थिमि उत्कृष्ट



भक्तपुर । मध्यपुर थिमि नगरपालिका सूचनाको हक कार्यान्वयन र सूचना प्रवाहमा उत्कृष्ट भएको छ। राष्ट्रिय सूचना आयोगको १८औं वार्षिकोत्सवका अवसरमा सोमवार सूचनाको हक कार्यान्वयनमा उत्कृष्ट कार्य गरेवापत नगरपालिकाका सूचना अधिकारी केशव सिलवाललाई उत्कृष्ट सूचना अधिकारीको रुपमा पुरस्कृत गरिएको हो । पुरस्कारको राशी नगद ३० हजार रहेको छ ।

सिलवाललाई आयोगले राष्ट्रपति भवन शितल निवासमा आयोजित कार्यक्रममा राष्ट्रपति रामचन्द्र पौडेलले पुरस्कृत गरेको हो । सो अवसरमा सूचनाको हकको कार्यान्वयनमा योगदान गर्ने विभिन्न व्यक्तित्वहरुलाई पनि नगदसहित सम्मान गरिएको थियो । सम्मानित हुनेमा विनय कसजु सर्वोत्कृष्ट पुरस्कार वरिष्ठ पत्रकार एवं सूचनाको हकको अभियन्ता तारानाथ दाहाललाई प्रदान गरियो । उक्त पुरस्कारको राशि रु ५५ हजार र प्रशंसापत्र रहेको छ ।

यसैगरी, उत्कृष्ट सूचना अभियन्तातर्फ नेपाल समाचारपत्रका कार्यकारी सम्पादक दीपक रिजाल, टक्सार म्यागेजिनका प्रधान सम्पादक गजेन्द्र बुढाथोकी, गोरखापत्रको फोटो पत्रकार कविता थापा र हरिराम कोन्डालाई पुरस्कृत गरियो । पुरस्कारको राशि रु ३० हजार र सम्मानपत्र रहेको छ ।

नगद रु ३० हजार राशिको उत्कृष्ट सूचना अधिकारी पुरस्कार देवीप्रसाद थपलिया, पदमकुमार श्रेष्ठ, हेमन्तकुमार बुढाथोकी र बुद्धिराम न्यौपानेलाई प्रदान गरियो । आयोगको उत्कृष्ट कर्मचारीतर्फ सन्तोष दाहाल, सुदर्शन ढकाल, दिनेश लुईंटेल, रञ्जना दाहाल, सीताराम बस्नेत र माइली तामाङलाई प्रदान गरिएको छ ।

कार्यक्रममा सञ्चार तथा सूचना प्रविधिमन्त्री पृथ्वीसुब्बा गुरुङले सूचनाको हक कार्यान्वयनमा सरकार प्रतिबद्ध रहेको बताए । सञ्चारमन्त्री गुरुङले सरकार नागरिकको सूचनाको हकप्रति प्रतिबद्ध भएको र यसलाई प्रभावकारी ढङ्गले कार्यान्वयन गराउने भन्ने कुरामा चिन्तित रहेनुका साथै सङ्घीय लोकतान्त्रिक गणतन्त्रलाई सार्थक बनाउन र औचित्य पुष्टि गर्नका लागि पनि सूचनाको हकको पहुँच र प्रवर्धनकाका

बाँकी पेज ७ मा

## निलबाराही पहिरो रोकथामको बजेट : जति आए पनि वालुवामा पानी : स्थानीय आन्दोलित

मध्यपुर थिमि । काठमाडौं उपत्यकाबासीका आस्थाको केन्द्रको रुपमा रहेको मध्यपुर थिमि नगरपालिका वडा नं ९ निलबाराहीस्थित ऐतिहासिक निलबाराही मन्दिर क्षेत्र । यहाँ विशेष गरेर काठमाडौं उपत्यकाका नेवार समुदायहरु कम्तीमा वर्षमा एक पटक सपरिवार दर्शन गर्न आउनुपर्ने परम्परा रहेको छ । पछिल्लो समय यो क्षेत्र पिकनिक मनाउन आउनेहरुको लागि पनि आकर्षणको केन्द्र बनेको छ ।



यही ऐतिहासिक मन्दिर क्षेत्र विगत लामो समय देखि पहिरोको खतरामा पर्दै आएको छ । जब वर्षायाम सुरु हुन्छ, यस क्षेत्रलाई पहिरो जानबाट जोगाउन प्लाष्टिकले छोपिन्छ । तर पनि वार्षिक निरन्तर पहिरो जाने क्रम रोकिएको छैन । मन्दिरको दक्षिण पश्चिमको मन्दिर जाने बाटोमा पहिरो जाने क्रम निरन्तर प्रत्येक वर्ष वढ्दो छ । पहिरोकै कारण हरेक वर्ष बाटो साँघुरिएको छ। यही कारण कुनै दिन मन्दिर पुग्ने बाटो नै नरहने खतरा बढ्दै गएको छ ।

यसरी मध्यपुर थिमिको ऐतिहासिक मन्दिर क्षेत्र भएको र वन क्षेत्रसमेत भएको यो क्षेत्र पहिरोको उच्च जोखिममा परे पनि अहिलेसम्मका तीन जना नगर प्रमुखहरुको प्राथमिकतामा यने क्षेत्र पर्न नसकेको स्थानीयको भनाई छ । अर्थात नगरपालिकाले केही पनि गर्न सकेनन्, स्थानीय साँस्कृतिक अभियन्ता अनिश वैद्यले भने, यही कारण हामी आफैं केही गर्न खोजिरहेका छौं ।

मन्दिर वचाउनकै लागि स्थानीयले गत शनिबार बिहान भक्तजन भेला समेत आयोजना गरेका छन् । भेलाबाट उनीहरुले स्थानीय दिलकृष्ण राजबहाकको संयोजकत्वमा १३ सदस्यीय

बाँकी पेज ७ मा

# आर्थिक वृद्धिदर हासिल गर्न आन्तरिक ऋण लिनु अपरिहार्य




काठमाडौं । प्रधानमन्त्रीका आर्थिक तथा विकास सल्लाहकार डा. युवराज खतिवडाले मुलुक आर्थिक लयमा फर्किएको बताउँदै यही गतिमा अगाडि बढेमा आगामी बर्षमा विकासोन्मुख राष्ट्रबाट नेपाल विकाससिल राष्ट्रमा स्तरोन्नती हुने विश्वास व्यक्त गरेका छन् । आइविएन मिडिया एण्ड रिसर्च प्रा.लि.ले नेपाल टेलिभिजनबाट प्रशारण गरिरहेको साप्ताहिक आर्थिक कार्यक्रम अर्थको अर्थ ३१ औं वर्ष पुरा गरी ३२ औं वर्षमा प्रवेश अवसरमा आयोजित "पूर्व बजेट अर्न्तक्रिया" कार्यक्रममा प्रमुख अतिथिको रुपमा सम्बोधन गर्दै डा. खतिवडाले वर्तमान अवस्थामा मुलुकका सवै आर्थिक सूचकहरु सकारात्मक रहेको बताए । उनले नेपालको आर्थिक वृद्धिको लक्ष्य हाँसिल गर्न आगामी बजेटमा ऋण लिएरै भए पनि अर्थतन्त्रलाई चलायमान बनाउनुपर्नेमा जोड दिए ।

पूर्व अर्थमन्त्री समेत रहेका डा. खतिवडाले देशमा ५ प्रतिशतभन्दा बढी आर्थिक वृद्धिदर हासिल गर्न आन्तरिक ऋण लिनु अपरिहार्य रहेको स्पष्ट पारे । उनले ६-७ प्रतिशतको आर्थिक वृद्धिदर हासिल गर्न ऋणको आकार बढाउनुपर्ने आवश्यकता औंल्याए । "मैले अर्थमन्त्री हुँदा आन्तरिक ऋणका लागि क्षेत्र निर्धारण गरेको थिएँ," डा. खतिवडाले भने, "अब भने केवल क्षेत्र तोकेर मात्र पुग्दैन, ठोस परियोजना निर्धारण गरेर आन्तरिक ऋण लिनुपर्ने आवश्यकता छ ।"

डा. खतिवडाका अनुसार सरकारले हालै सार्वजनिक गरेको नीति तथा कार्यक्रममा सूचना प्रविधिलाई प्राथमिकता दिइएको छ । त्यसअनुसार 'बिजनेस प्लान' र 'इकोसिस्टम' निश्चित गरी 'जेन्जी पुस्ता' लक्षित 'स्टार्टअप' कार्यक्रम सञ्चालन गर्ने तयारी गरिएको छ । यसले युवालाई लक्षित गर्दै उद्यमशीलताको माध्यमबाट आन्तरिक रोजगारी सिर्जना र आयआर्जनको अवसर बढाउने डा.खतिवडाले विश्वास व्यक्त गरे ।

मितव्ययिताको चर्चा गर्दै प्रधानमन्त्रीका सल्लाहकार डा. खतिवडाले वैदेशिक भ्रमण भन्दा पनि सरकारी प्रणालीमा सफ्टवेयर खरिदमा बढी खर्च हुने गरेको उल्लेख गरे । "सार्वजनिक खरिद प्रक्रियामा अझै समस्याहरू छन्," उनले भने, "त्यसका लागि सार्वजनिक खरिद ऐनमा संशोधन गरी आगामी संसद अधिवेशनमा प्रस्ताव पेश गरिने तयारी छ ।" सरकारी आयोगहरूले दिएका प्रतिवेदनहरू कार्यान्वयन नभएकोप्रति उठेका प्रश्नहरूबारे जवाफ दिँदै डा. खतिवडाले ती प्रतिवेदनहरू पूर्ण नहुनु, अध्ययन आवश्यक देखिनु र चरणवद्ध रूपमा लागू गर्ने तयारीका कारण ढिलाइ भएको बताए ।

उनका अनुसार आर्थिक सुधार आयोग र खर्च पुनरावलोकन आयोगका सुझावहरूलाई क्रमिक रूपमा कार्यान्वयनमा ल्याउने सरकारको योजना रहेको छ । डा. खतिवडाले देशको आर्थिक उन्नतीका लागि सवै क्षेत्र थप जिम्मेवार भएर अगाडि बढ्नुपर्ने बताए ।

कार्यक्रममा त्रिभुवन विश्वविद्यालयका प्राध्यापक डा. रेशम थापाले आगामी आर्थिक वर्ष २०८२/ ८३ को लागि सम्भावित "पूर्व बजेट र यसले समेट्नुपर्ने विषय"का बारेमा कार्यपत्र प्रस्तुत गर्दै आगामी बजेटलाई लयमा फर्काउन अर्थतन्त्रका सवै क्षेत्रलाई चयलामान बनाउनुपर्नेमा जोड दिए । प्राध्यापक डा. थापाले सरकारले यथासक्य चाँडो नेपाल राष्ट्र बैंकको गभर्नर नियुक्त गर्नुपर्नेमा जोड दिए ।

प्राध्यापक डा. थापाद्धारा प्रस्तुत कार्यपत्रमा वर्तमान अवस्थामा बाहिर हेर्दा मुलुकको अर्थतन्त्र कम्जोर देखिए पनि तथ्याङ्कथगत रुपमा सुधारोन्मुख देखिएको तथ्य सार्वजनिक गरिएको थियो । कार्यक्रममा नेपाल उद्योग वाणिज्य महासंघका महानिर्देशक गोकर्ण अवस्थि, अर्थशास्त्री केशव आचार्य, साइबर सुरक्षा अनुसन्धान तथा नवप्रवर्तन केन्द्रका अध्यक्ष डा. शालिग्राम पराजुली, नेपाल खुला विश्वविद्यालयका प्राध्यापक डा.भोजराज घिमिरे, साइबर सुरक्षा अनुसन्धान तथा नवप्रवर्तन केन्द्रका संस्थापक अध्यक्ष चिरञ्जीवी अधिकारी लगायतले सरकारले प्रस्तुत गरेको नीति तथा कार्यक्रममाथी टिप्पणी गर्नुका साथै आगामी बजेटमा समावेश गर्नुपर्ने विषय, बजेट कार्यन्वयनका चूनौती, सुशासनमा रहेका समस्या तथा सुधार र समाधानका उपायहरुका बारेमा धारणा राखेका थिए । कार्यक्रमका सभापतित्व आइविएन मिडिया एण्ड रिसर्च प्रा.लि.का प्रवन्ध निर्देशक हृदयराज गौतमले गरेका थिए । उक्त अवसरमा अर्थको अर्थ कार्यक्रमको ३२ औं स्मारिका पुस्तक समेत विमोचन गरिएको थियो ।

# बौद्ध शिक्षा प्राप्तिका लागि देशभरबाट भक्तपुर आगमन



भक्तपुर । बौद्ध शिक्षा प्राप्तिका लागि देशभरबाट झण्डै तीन दर्जन कुलपुत्रहरु भक्तपुरको विहारमा पुगेका छन् । भक्तपुर नगरपालिका वडा नं ७ खँचा इनाचोस्थित मुनि विहारमा उनीहरुलाई सोमबारबाट औपचारिक रुपमा वौद्ध शिक्षा प्रदान गर्न थालिएको छ ।

यो वर्ष बौद्ध शिक्षा लिन देशका विभिन्न जिल्लाहरुबाट भक्तपुर आएकाहरुलाई सोमबार सामूहिक प्रवज्या (स्वागत) गरिएको थियो । यसअघि उनीहरुलाई बौद्धमार्गीहरुले लगाउने चिवर (पहेँलो पहिरन) लगाउन दिइएको थियो । साथै यसअघि नै बौद्ध परम्परा अनुसार कपाल खौराइएको थियो । इनाचो मुनि विहार व्यवस्थापन समितिका सचिव शिव बालाका अनुसार प्रत्येक वर्ष मे ५ मा यसरी नै मुनि विहारमा प्रवज्या कार्यक्रम हुन्छ । त्यसअघि देशभरबाट बौद्ध शिक्षा लिन चाहनेहरुलाई आह्वान गरिन्छ । त्यस अनुसार वर्षमा एक पटक यहाँ सवैलाई जम्मा पारी औपचारिक शिक्षा सुरु हुन्छ । यसका लागि अभिभावक वा सरोकारवालाहरुले सम्पर्क गरी मुनि विहारको नाममा आफना सन्तानहरुलाई छोडेर जाने गरिन्छ । नयाँ शैक्षिक सत्र पनि यही समयमा हुने भएकाले सरकारी शिक्षाका लागि पनि यही समय उपयुक्त भएकाले वर्षमा एक पटक यही बेला बौद्ध शिक्षाका लागि आह्वान गरिन्छ ।

मुनि विहारमा वस्न थालेपछि उनीहरु बौद्ध परम्परा अनुसार मुनि विहारमै वस्नुपर्छ । उनीहरुलाई त्यहाँ गाँस, बास अनि कपासको व्यवस्था मुनि विहार नै निःशुल्क रुपमा गरेको हुन्छ । साथै उनीहरुलाई सरकारी स्कुलहरुमा पढाउने वन्दोवस्त मुनि विहारले नै गरेको हुन्छ । उनीहरु सवैजना वौद्ध परम्परा अनुसार नै चिवरमा वसेर भिक्षा लिन पनि हिडनुपर्छ । साथसाथै दैनिक बौद्ध शिक्षा पनि लिनुपर्छ । यसका अलावा निःशुल्क स्वास्थ्य उपचारको सेवा पनि उनीहरुले पाएका हुन्छन् । मुनि विहारका अर्जुन भन्तेले पछिल्लो पाँच वर्षमा वर्षमा देशभरबाट झण्डै तीन दर्जनदेखि ६ दर्जनसम्म बौद्ध शिक्षाका लागि आउने गरेको जानकारी गराए । त्यसमा पुरुषहरु मात्रै हुने गर्दछन् । महिलाहरुका लागि छुटै वन्दोवस्त हुन्छ । साथसाथै घटीमा १० वर्षका हुनुपर्छ । वढीमा जति वर्षका भए पनि आउन पाउँछन् । तर उनीहरु सवैजना बौद्ध परम्परा अनुसार विहारमै बस्नुपर्छ र बौद्ध शिक्षामा सहभागी हुनुपर्छ ।

इनाचो मुनि विहार भक्तपुरका प्रमुख विपस्वी भन्तेले विहारमा जीवन विताउन थालेपछि उनीहरु भविष्यमा बौद्ध शिक्षामै रहिरहन सक्छन् । उनका अनुसार सुरुमा उनीहरुलाई श्रामणेर भनिन्छ । पछि चिवर लगाएर बौद्ध शिक्षामै रहिरहन चाहेमा उनीहरुलाई भिक्षु भनिन्छ । साथसाथै मन नलागे श्रामणेर भएर पछि फेरि सामान्य जीवन विताउन आफनै घरमा जान सकिन्छ । बौद्ध शिक्षाका लागि विहारमै बस्ने वन्दोवस्त भक्तपुरको इनाचो मुनि विहार एउटै मात्रै हो ।

# कोशी प्रोजेक्ट शोकेसको उत्कृष्ट दश टीम छनौट



काठमाडौं । कोशी प्रोजेक्ट शो केस प्रतियोगितामा १० टीम फाइनल चरणमा छनौट भएका छन् । शनिबार राजधानीमा आयोजित छनौट चरणबाट १० वटा उत्कृष्ट प्रोजेक्ट फाइनल चरणमा पुगेका हुन् ।

फाइनल चरणमा पुग्नेहरुमा नेपाल इन्जिनियरिङ कलेजको एग्रो भिलेज टीम, पुल्चोक कलेजको स्केट्च स्क्वायर, पुल्चोक कलेजकै केटुपिए, एक्मी इन्जिनियरिङ कलेजको एक्मी कोस्टर, पुल्चोक कलेजको पुल्चोक इयर फाइभ रहेका छन् । यस्तैगरी, पुल्चोक कलेजकै पाथफाइण्डर, ख्वपः इन्जिनियरिङ कलेजको बियोण्ड द ब्रिउ, पुल्चोक कलेजका विनर र टिम कोशी एक्सप्लोरल रहेका छन् । नेपाल इन्जिनियरिङ कलेजको रुरल रिड्ज विल्डर्स टीमपनि फाइनल चरणमा पुगेको छ ।

शनिबार नेपाल माउण्टेन एकेडेमीको हलमा प्रतिष्पर्धी समुहले प्रस्तुत गरेको अवधारणा अनुसार निर्णायक मण्डलले उत्कृष्ट १० टिमको छनौट गरेको हो । प्रतियोगिताको निर्णायकहरुमा नेपाल पर्यटन बोर्डका उपाध्यक्ष रामप्रसाद सापकोटा (कमल), नेपाल माउण्टेन एकेडेमीका प्राचार्य शिवप्रसाद जैसी खतिवडा, प्राइम कमर्सियल बैंक बागमती प्रदेश प्रमुख दिमन श्रेष्ठ, सोसाइटी अफ आर्किटेक्ट इन्जिनियर्स एशोशिएसनका पूर्व उपाध्यक्ष सुनिता सुवेदी तथा नेपाल इन्जिनियरिङ कलेजको सिभिल इन्जिनियरिङ विभागका सह-प्राध्यापक रमेश ज्ञवाली रहको थियो ।

निर्णायकहरुले प्रतिष्पर्धी टिमले प्रस्तुत गरेको अवधारणामा नवप्रर्वद्धन र सृजनशीलता, प्राविधिक संभाब्यता, आर्थिक एवम् वातावरणीय प्रभाव, प्रस्तुति, पर्यटनमैत्री योजनाका आधारमा अंकहरु प्रदान गरेका थिए । विद्यार्थीहरुको समुहले होम स्टे, कृषि पर्यटन, माउण्टेन पर्यटन, ट्रेकिङ, चिया, र्‍याफ्टिङ, बञ्जिजम्प, एडभेञ्जर जस्ता विषयहरुमा प्रस्तुति दिएका थिए ।

प्रतियोगिताको आयोजक एलिसन हस्पिटालिटीकी अध्यक्ष एलिना मगरका अनुसार उत्कृष्ट १० मा पर्न सफल टीमहरुलाई अब उनीहरुका अवधारणा अनुसार थप अध्ययनका लागि फिल्डमा पठाइन्छ । त्यसका लागि प्रत्येक टीमलाई एक जना मेन्टर (सल्लाहकार) समेत उपलब्ध गराईन्छ । छनौट भएका प्रत्येक टीमलाई एकएक जना मेन्टर उपलब्ध गराइन्छ । त्यसपछि थप अध्ययन र अनुसन्धानका लागि फिल्डमा जाने छन् । अध्यक्ष मगरले भनिन् ।

ठमेलको जी रामायण होटलमा हुने प्रदर्शनी तथा फाइनल कार्यक्रममा पर्यटन व्यवसायी, होटल व्यवसायीसँगै ठूला लगानीकर्ता र सरकारी क्षेत्रबाट समेत प्रबुद्ध व्यक्तिहरुले अध्ययन अवलोकन गर्नेछन् । कोशी क्षेत्रको पर्यटन प्रवर्द्धनसँगै नयाँ पर्यटनका आयामहरुलाई उजागर गर्ने उद्देश्यले आयोजित प्रतियोगिताको छनौट चरणमा १९ वटा समुहको प्रोजेक्टको छनौट गरिएको थियो । जसमध्ये शनिबारको छनौट चरणबाट १० वटा उत्कृष्ट टिम फाइनल चरणमा पुगेका हुन् ।

प्रतियोगितामा पुल्चोक इन्जिनियरिङ कलेज, नेपाल इन्जिनियरिङ कलेज, ख्वप इन्जिनियरिङ कलेज, एक्मी इन्जिनियरिङ कलेज, पूर्वाञ्चल इन्जिनियरिङ कलेज लगायतबाट विद्यार्थीहरुको सहभागीता रहेको थियो । नेपालमै पहिलोपटक आयोजना भएको कोशी प्रोजेक्ट शो केसले कोशी प्रदेशमा नयाँ पर्यटकीय क्षेत्रको संभाव्यता अध्ययन गर्दै पर्यटनबाटै मुलुकको अर्थतन्त्रको विकास गर्न सकिन्छ भन्ने सन्देश प्रवाह गर्ने अपेक्षा लिइएको छ । प्रतियोगितामा प्रथम हुने टीमलाई नगद रु. १ लाख, द्वितिय हुने टीमलाई रु. ५० हजार तथा तृतिय हुने टीमलाई रु. २५ हजार नगद, मेडल, प्रमाणपत्र र विभिन्न गिफ्ट ह्याम्परहरु प्रदान गरिनेछ । प्रतियोगितालाई कोशी प्रदेश सरकार, नेपाल पर्यटन बोर्ड लगायतले सहयोग गरेका छन् ।

# बालकुमारी साकोस उत्कृष्ट घोषित

भक्तपुर । बालकुमारी बचत तथा ऋण सहकारी संस्था लि., मध्यपुर थिमिलाई भक्तपुर जिल्ला बचत तथा ऋण सहकारी संघ लि.ले आर्थिक वर्ष २०८०/०८१ को लागि उत्कृष्ट सहकारी व्यवसाय पुरस्कार-२०८१ प्रदान गरेको छ ।

शनिबार सम्पन्न संघको २१ औं स्थापना दिवस समारोहका अवसरमा नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि. (नेफ्स्कून) का अध्यक्ष चन्द्रप्रकाश ढकालले संस्थाका अध्यक्ष तुईलाल श्रेष्ठलाई उक्त पुरस्कार हस्तान्तरण गरेका थिए । २०५७ साल असोज २ गते स्थापना भएको यस संस्थाले यसअघि पनि भक्तपुर जिल्लाको उत्कृष्ट सहकारी पुरस्कार (डिभिजन सहकारी कार्यालय, भक्तपुर) तथा उपत्यकाको उत्कृष्ट सहकारी पुरस्कार (राष्ट्रिय सहकारी बैंक लि.) प्राप्त गरिसकेको छ । आर्थिक जीवनस्तर उकास्ने कार्य र सामाजिक उत्तरदायित्वमा उल्लेखनीय योगदान पुऱ्याएको भन्दै विभिन्न संघसंस्थाबाट यसलाई सम्मानित गरिएको छ ।

स्थापना कालमा ७ लाख रुपैयाँ शेयर पूँजीसहित २८ जना स्थानीयको पहलमा सुरु भएको यो सदस्यमैत्री सहकारी संस्था हालसम्म ५९१५ जना शेयर सदस्यसम्म पुगिसकेको छ । २०८२ वैशाख १९ गतेसम्मको तथ्याङ्कअनुसार, संस्थाको कुल कारोबार २ अर्ब १७ करोड ९३ लाख १४ हजार ४८९ रुपैयाँ पुगेको छ ।

संस्थाले समयअनुसार ब्याजदर समायोजन गर्दै, सदस्यहरूलाई विभिन्न आकर्षक ऋण सुविधाहरू प्रदान गरिरहेको छ। हाल 'सदस्य समृद्धि कर्जा' ८% ब्याजदर, 'सुविधा ऋण' ८.५% ब्याजदर (शर्त लागू हुने), र 'बालकुमारी सुनौलो कर्जा' ९.५% ब्याजदरमा उपलब्ध गराइरहेको छ ।

# दलको कार्यालय जोगाउन सेना परिचालन, देशको भूभाग कब्जा गर्दा मौन !

गत चैत १५ गते काठमाडौंको तीनकुनेमा राजावादीहरुले गरेको आन्दोलनले उग्र रुप लियो। आन्दोलन नेपाल प्रहरी र सशस्त्र प्रहरीको नियन्त्रण बाहिर भएपछि सरकारले तत्काल सेना परिचालन गर्यो । त्यो सेना च्यासलस्थित नेकपा एमालेको पार्टी कार्यालयमा पनि खटियो । राजनीतिक दलहरुको पार्टी कार्यालय संरक्षणमा सेना खटिएको थियो ।

सेना देशको रक्षक हो । राष्ट्रलाई कुनै पनि आपतविपत पर्दा सेना खटाइन्छ । विडम्बना, पछिल्लो समय छिमेकी देश भारत र चीनले नेपाली भूभागमाथि कब्जा गर्न खोजिरहँदा सेना मौन देखिन्छ । सीमा सुरक्षामा सेना खटिएको पाइँदैन । अनि राष्ट्रको संरक्षणकै निम्ति राखिएको सेनालाई किन सरकार मुलुकको भूभागमाथि कब्जा हुन लाग्दा परिचालन गर्दैन ?

दलको पार्टी कार्यालय संरक्षणका लागि तुरुन्त सेना परिचालन गर्ने अनि देशको भूभाग नै छिमेकीले कब्जा गर्दा चाँहि चुपचाप ! यसको जवाफ अब सरकारले दिनैपर्छ । सरकार भारत र चीनसामु झुकेकै हो त ? कि सरकारमा बसेकाहरुलाई देशै छिमेकीले लगेपनि मतलब छैन ? मुलुकको भूभागमाथि लगातार कब्जा भइरहँदा अहिले नेपाली सेनाको औचित्यमाथि नै प्रश्न खडा भएको छ ।

सेना किन राखिएको ? आपतविपतमा काम नगर्ने सेना हटाउँदा नि हुन्छ ? देशको भूभाग संरक्षण गर्न नसक्ने सेना किन चाहियो ? कामै नलाग्ने सेनालाई हामी किन पाल्ने ? भन्नेजस्ता प्रश्न आम सर्वसाधारणमा व्याप्त पाइन्छ । जुन एक किसिमले सही पनि हो । सेना देशको सुरक्षाका निम्ति राखिएको हो । सेनाको काम राष्ट्रको संरक्षण गर्नु हो । दुर्भाग्य, हामी कहाँ चाँहि सेना सीमानामा कम, ब्यारेकमा बढी भेटिन्छन् ।

यसले छिमेकीहरुको मनोबल बढिरहेको छ । उनीहरुले सोचे कि, नेपाल कमजोर छ । हामीले नेपालको भूभाग कब्जा गरेपनि नेपाली सेना केही गर्न सक्दैनन् । अहिले भइरहेको पनि यही नै छ । छिमेकीले लगातार नेपाली भूभाग अतिक्रमण गरिरहँदा हाम्रो सेना टुलुटुलु हेरेर बसिरहेको छ । केही पनि गर्न सकेको छैन । हुन त नेपाली सेना कति कमजोर छ, यो विगतका विभिन्न घटनाक्रमले समेत देखाउँछ ।

२०५२ फागुन १ गतेदेखि माओवादीले जनयुद्ध शुरु गर्यो । दश वर्षे जनयुद्धमा १७ हजार बढीले ज्यान गुमाए । जनयुद्ध रोक्न तत्कालिन सरकारले सेना परिचालन गर्यो । तर, सेना असफल भयो । माओवादीसँग लड्न सकेन अनि सेनाले आत्मसमर्पण गर्यो । त्यसपछि जनयुद्ध सफल मात्र भएन देशबाट राजतन्त्रसमेत हट्यो । राजा ज्ञानेन्द्र वीर विक्रम शाहले दरबार छोड्नुपर्यो ।

यस्तै, ०५८ जेठ १९ गते राजा विरेन्द्र वीर विक्रम शाहको वंशज नाश भयो, त्यो पनि दरबारभित्रै । त्यतिबेला राजपरिवार र दरबारको सुरक्षा जिम्मा सेनाले लिएको थियो । सेनाले आफ्नै राजाको समेत सुरक्षा गर्न सकेन । जसका कारण राजा विरेन्द्रको परिवारै सखाप भयो । देशमा वर्षेनी बाढी, पहिरो, भूकम्पलगायत विभिन्न प्राकृतिक प्रकोप आउँछ । त्यसमा पनि सेना खटिएको देखिँदैन । मुलुक आपत विपतमा हुँदा सेना कहि कतै खटिएको पाइँदैन । सेना जनताले तिरेको करबाट तलबभत्ता खान्छन् । जनताकै करबाट किनिएको पोशाक लगाउँछन् । खाना खान्छन् । अनि ब्यारेकभित्र बस्छन् । ब्यारेकभित्र सेना के गरेर बस्छ त ? यो आम सर्वसाधारणमा प्रश्न उठिरहेको छ ।

सेना देश र जनताको सेवक र रक्षक नभई व्यापारी बन्दै गएको छ । राष्ट्रको संरक्षणमा खट्नुको साटो सेना पेट्रोल कम्प, हाउजिङ, जग्गा प्लानिङलगायतमा लगानी गरिरहेको छ । कतिपय सैनिकले त मीटरब्याजमा पैसा लगानी गरेको पनि सुनिन्छ । सेनाले सार्वजनिक काम गरेको अहिलेसम्म नदेखेको सर्वसाधारण बताउँछन् ।

उनीहरु भन्छन्, 'ब्यारेकभित्र बस्नुको साटो सार्वजनिक काममा खटिएको भए राम्रो हुन्थ्यो । कि देशको सीमा सुरक्षामा खट्नुपर्यो । नभए किन राखिएको सेना ?' सेना जनतासँग नजिक छैन । जबकी सेना भनेकै जनता र देशको हो । अनि जनतासँग घुलमिल नै नहुने सेनाको के काम ? अब सेना कि त सार्वजनिक काममा खट्नुपर्छ कि सीमा सुरक्षामा ।

नभए सरकारले देशमा सेना राख्न व्यवस्था नै खारेज गरिदिनुपर्छ । किनकि अहिले मुलुकमा सेना भएपनि छिमेकीले हाम्रो भूभागमाथि कब्जा गरिरहेको छ । आपतविपतमा सेना खट्दैंन । अनि देश संकटमा पर्दा काम नलाग्ने सेना किन चाहियो ? हिजो जनयुद्धको समयमा धेरै प्रहरी र सेनाले जागिर नै छोडे । यदि सरकारले भारत र चीनले कब्जा गरेको भूभाग फिर्ता ल्याउन निर्देशन दिएमा अहिले सेनामा कार्यरत अधिकांशले जागिर छोड्ने छन् ।

यतिमात्र होइन मुलुकमा अर्को जनयुद्ध भयो भनेपनि सेनाले तत्काल आत्मसमर्पण गर्ने छ । सेना जागिर खाने थलो र भ्रष्टाचार गर्ने अखडा मात्र बन्यो । सजिलो हुनुञ्जेल सेनामा जागिर खाने अनि संकट पर्नासाथ जागिर नै छोड्ने प्रवृत्ति विगतदेखि अहिलेसम्म जारी नै छ । दश वर्षे जनयुद्ध समाप्तपछि त्यसको कमाण्डर पुष्पकमल दाहाल प्रचण्ड पहिलो पटक सार्वजनिक भए ।

बालुवाटारस्थित प्रधानमन्त्री निवासमा पत्रकार सम्मेलन गर्दै उनले सेनाबारे भनेका थिए, 'नेपाली सेनाको काम छैन । हामीसँग त पराजित हुने सेनाले भारत र चीनसँग कसरी लड्न सक्छ। सेना आवश्यक नै छैन ।'

केही समयअघि एमाले र रास्वपा सांसदहरुले पनि सदनमा सेना औचित्यविहीन भएको भन्दै हटाउनुपर्ने आवाज उठाएका थिए । सेनाको ब्यारेक देशभर छ । तर, ती ब्यारेक जिल्लाको सदरमुकाम वा राजधानीको मुटुमा छ। सीमानामा सेनाको एउटै ब्यारेक छैन । जनता कर तिर्न नसक्ने अवस्थामा पुगेका छन् । बिहान-बेलुकाको छाक टार्नसमेत उनीहरुलाई धौधौ परेको छ ।

अनि राजस्व नउठेर मुलुकको अर्थतन्त्र डामाडोल अवस्थामा पुगिरहँदा कामै नगर्ने वा ब्यारेकभित्र मात्र थुप्रिएर बस्ने सेना किन आवश्यक ? खाईनखाई कर तिरेर जनताले किन सेनालाई तलबभत्ता खुवाउने ? अब सरकारले कि त हरेक काममा सेना खटाउने व्यवस्था लागू गर्नुपर्छ, नभए देशको भूभागको संरक्षण गर्न नसक्ने सेना हामीलाई चाहिँदैन ।

अहिले सेनाको काम प्रधानमन्त्री, राष्ट्रपति, मन्त्री, सभामुखलगायत भिआईपीहरुको सेवामा खट्ने मात्र देखिन्छ । भिआईपी गाडी चढ्दा वा ओर्लिंदा ढोका खोलिदिने र उफ्रिउफ्रि सलाम ठोक्छ, सेना । सलाम ठोकेकै भरमा सेनाले तलबभत्ता खाइरहेको छ । अनि भिआईपीको सेवाका निम्ति सेना राखिएको कि देशको सुरक्षाका लागि ?

मुलुकको भूभागको सुरक्षा अब जनताले नै गर्ने छन् । आफ्नो सुरक्षा पनि आफैंले गर्छन् अब सर्वसाधारण । जनता अब आफैं सेना बन्छन् । देशको भूभागको रक्षाका लागि अब सेनाको आवश्यक नै पर्दैन, जनता आफैं आफ्नो भूभागको सुरक्षामा खटिने छन् । विदेशी ऋण २७ खर्ब पुगिसक्यो । जनताले यत्रो वर्षदेखि तिर्दै आएको कर सुको बाँकी छैन । विदेशबाट नेपालीले पठाएको रेमिट्यान्स पनि छैन । उल्टै सरकार देशभित्रै ऋणको दलदलमा छ । निर्माण व्यवसायीको ४५ अर्ब, दुध र उखु किसानको सात अर्ब र कोरोना बीमाको २४ अर्ब भुक्तानी सरकारले दिन सकेको छ र यो दिन सरकारसँग पैसा नै छैन । देशको आर्थिक अवस्था दिनप्रति दिन नाजुक अवस्थामा पुगिरहेको छ ।

यस्तो अवस्थामा कामै नगर्ने सेनालाई पालेर किन आर्थिक बोझ मात्र बढाउने ? सेना मात्र होइन, अनावश्यक सरकारी कर्मचारी वा शिक्षक पनि कटौती गरिनुपर्छ । करार, ज्यालादारी कर्मचारीलाई हटाउनुपर्छ। काम नगर्ने कर्मचारीलाई राखेर जनता र देशमाथि आर्थिक बोझ बढाउने होइन, उनीहरुलाई हटाउने हो । अब सरकारले अनावश्यक कर्मचारी हटाई सेवामा रहनेलाई समेत मासिक होइन, घण्टाको हिसाबले तलब दिने व्यवस्था लागू गर्नुपर्छ। यसो गरिए देश बच्न सक्छ। नभए देशको सेवा र रक्षाका निम्ति राखिएकाहरुलाई तलबभत्ता खुवाउँदाखुवाउँदै देश विदेशीले कब्जा गर्ने छ। रुषा थापा

# दुखाइ कम गर्ने औषधि आइबुप्रोफेनको अत्यधिक प्रयोगको साइड इफेक्ट




एजेन्सी । प्राय जसो मानिसहरू आपतकालीन अवस्थामा रुघाखोकी, ज्वरो र दुखाइको औषधि आफूसँगै राख्छन् । जब मानिसहरूलाई यी औषधिहरूको आवश्यकता पर्दछ, तब प्रयोग गर्न सहज हुन्छ । आजको अधुनिक जीवनशैलीमा धेरै मानिसहरू जसले सानो समस्याको लागि पनि धेरै औषधिको सेवन गर्ने गर्दछन् । त्यस्तै एउटा औषधिको नाम इबुप्रोफेन हो, जुन दुखाइबाट राहत पाउनको लागि लिइन्छ । विश्वमा लाखौं मानिसहरूले यो औषधि अत्यधिक रुपमा प्रयोग गर्छन् भन्ने कुरा थाहा पाउँदा तपाईंलाई अचम्म लाग्नेछ । एक अमेरिकी डाक्टरले सामाजिक सञ्जाल मार्फत मानिसहरूलाई आइबुप्रोफेनको अत्यधिक प्रयोग नगर्न चेतावनी दिएका छन् । उनले हरेक दिन आइबुप्रोफेन सेवन गर्दा कसरी गम्भीर स्वास्थ्य समस्याहरू निम्त्याउन सक्ने विषयमा चेतावनीमूलक बिश्लेषण गरेका छन् ।

ाटओआइ को एक रिपोर्ट अनुसार, अमेरिकाको सान फ्रान्सिस्कोमाग्यास्ट्रोएन्टेरोलोजिस्टकोरूपमा प्राक्टिस गर्ने डा. सौरभ सेठीले आइबुप्रोफेन एक सामान्य दुखाइ निवारक औषधी भएको जसले टाउको दुख्ने, जोर्नी दुख्ने, पेट दुख्ने, ज्वरो र सुन्निने जस्ता समस्याहरूबाट राहत प्रदान गर्न मानिसहरु यसको सेवन गर्ने गर्दछ । यो औषधि सामान्यतया सुरक्षित मानिन्छ, तर यसको अत्यधिक प्रयोग स्वास्थ्यको लागि हानिकारक हुन सक्छ । दैनिक आइबुप्रोफेन सेवन गर्दा आन्द्राको सूजन र पेटमा अल्सर हुने खतरा अत्याधिक हुन सक्छ । आइबुप्रोफेन जस्ता गैर-स्टेरोइडल एन्टी-इन्फ्लेमेटरी ड्रग्स (ल्क्ब्क्ष्मक) ले आन्द्रामा रगत प्रवाह कम गर्छ, जसले आन्द्राको अस्तरलाई क्षति पुऱ्याउन सक्छ ।

हार्वर्ड र स्ट्यानफोर्ड विश्वविद्यालयमा अध्ययन गरेका डा. सेठीले एन्डोस्कोपीको क्रममा धेरै पटक अन्य कुनै स्वास्थ्य समस्या नभएका युवाहरू आइबुप्रोफेनको अत्यधिक सेवनका कारण पेटमा गम्भीर सूजन र अल्सरबाट पीडित हुने गरेको देखेको बताए । नियमित रूपमा आइबुप्रोफेन सेवन गर्ने लगभग ७५ प्रतिशत मानिसहरूलाई पेटमा सूजन हुन्छ र लगभग २५ प्रतिशतलाई अल्सर जस्ता गम्भीर समस्याहरू देखा पर्छन् । आइबुप्रोफेन लिनु अघि, मानिसहरूले यसको सम्भावित साइड इफेक्टहरू बारे सचेत हुन उनले आग्रह गरेका छन् । यदि तपाई दैनिक आइबुप्रोफेन लिनुहुन्छ भने, तपाईंले आफ्नो डाक्टरसँग वैकल्पिक औषधिहरूबारे छलफल गर्नुपर्छ ।

डाक्टरहरुले आइबुप्रोफेन जस्ता औषधिहरू सधैं खानासँग मात्र खानु पर्ने सुझाव दिएका छन्, ताकि पेटमा दबाब कम होस् र आन्द्राहरू क्षतिग्रस्त नहोस् । आइबुप्रोफेनको अत्यधिक प्रयोगले मानिसहरूलाई टाउको दुख्ने, चक्कर लाग्ने, वाकवाकी लाग्ने, बान्ता हुने, ग्यास लाग्ने र पाचन समस्या हुने समस्या हुन सक्छ । यो औषधि लामो समयसम्म धेरै मात्रामा सेवन गर्दा गम्भीर एलर्जी र पिसाबमा रगत आउने जस्ता समस्याहरू हुन सक्छन् । यसबाहेक, मिर्गौला समस्याको जोखिम पनि हुन्छ । आइबुप्रोफेन लिँदा, मानिसहरूले आफ्नो डाक्टरसँग अनिवार्य रुपमा परामर्श लिएर मात्र सेवन गर्नु र यसको साइड इफेक्टको बारेमा पूर्ण जानकारी लिनु अति आवश्यक छ ।



# यी १० विषयहरूमा युट्युब भिडियो बनाए कमाउनुहुनेछ धेरै पैसा

एजेन्सी । के तपाईं युट्युबर बन्न चाहनुहुन्छ तर कस्तो प्रकारको च्यानल बनाउने थाहा छैन ? वास्तवमा, यो साँच्चै ठूलो प्रश्न हो किनभने यो तपाईंको ग्राहकहरू कति छिटो बढ्छन् भन्ने कुरामा निर्भर गर्दछ । यदि तपाईं २ करोड ५० लाख दर्शक वा सदस्यहरू चाहनुहुन्छ भने तपाईंले प्रचलनहरूमा ध्यान दिनुपर्नेछ । युट्युबको एल्गोरिथ्म बुझ्नुहोस् र तपाईंले बनाउनुहुने कुनै पनि भिडियो किवर्ड र विषयहरूमा आधारित हुनुपर्छ । साथै आफ्नो सामग्री कसरी पुनः प्रयोग गर्ने भनेर पनि सिक्नुहोस् । यसबाहेक, भिडियो कति लामो हुनुपर्छ र दर्शकहरूलाई संलग्न गराउन तपाईंले सामग्री कति रोचक बनाउनुहुन्छ, यी सबै कुराहरूले ग्राहकहरूको संख्यालाई असर गर्छ ।

तर यदि तपाईं अझै पनि कस्तो प्रकारको च्यानल हुनुपर्छ भन्ने कुरामा अड्किनुभएको छ भने, पहिले हामी तपाईंलाई त्यसमा मद्दत गरौं । यस पोस्टमा, हामी केही उत्कृष्ट युट्युब च्यानल विचारहरू वा आला साझा गर्दैछौं । यी ती च्यानलहरू हुन् जुन लोकप्रिय हुने सम्भावना बढी हुन्छ । यी १० निचहरू अर्थात् विषयहरू तपाईंको लागि लाभदायक साबित हुन सक्छन् । यी निचहरूमा भिडियो बनाएर तपाईंले धेरै पैसा कमाउन सक्नुहुन्छ ।

१. क्रिप्टो ट्रेडिंगः क्रिप्टो ट्रेडिंग आजकल धेरै प्रचलनमा छ । यस मार्फत, तपाईंले धेरै छिटो धेरै पैसा कमाउन सक्नुहुन्छ । जसरी तपाईंले शेयर बजारमा ब्रोकरहरूलाई प्रवर्द्धन गर्नुहुन्छ, त्यसरी नै तपाईंले क्रिप्टो ट्रेडरहरूलाई प्रवर्द्धन गरेर ब्रोकरेज कमाउन सक्नुहुन्छ। यसका साथै तपाईंले धेरै प्रायोजकहरू पनि पाउनुहुन्छ। क्रिप्टोमा धेरै ब्रान्डहरू छन् र धेरै नयाँ सिक्काहरू आइरहन्छन् । तिनीहरूको प्रचार गर्न तिनीहरूले तपाईंलाई पैसा दिन्छन् । यसबाहेक, युट्युबले त्यस्ता भिडियोहरूलाई छिटो मुद्रीकरण गर्छ र राम्रो पैसा तिर्छ किनभने तिनीहरूमा प्राप्त हुने विज्ञापनहरू धेरै प्रिमियम हुन्छन् ।

२. एआई टूल्स र एआई अपडेट्सः तपाईंले आफ्नो च्यानल सिर्जना गर्न सक्ने दोस्रो स्थान एआई टूल्स र एआई अपडेट्स हो । यस क्षेत्रमा धेरै वृद्धि भइरहेको छ । यदि तपाईं केवल मीम्स बनाउनको लागि एआई प्रयोग गर्दै हुनुहुन्छ भने तपाईंले कुनै तोप बनाउनुभएको छैन । एआईले यो भन्दा पनि बढी रचनात्मक काम गर्न सक्छ । तर ती सबै कार्यहरू प्रिमियम एआई द्वारा मात्र गरिन्छ । निःशुल्क एआईको साथ तपाईं आफूलाई मेम्समा मात्र सीमित गर्न सक्नुहुन्छ । यस्तो अवस्थामा, तपाईंले आफ्नो युट्युब च्यानलमा विभिन्न एआई उत्पादनहरूको प्रचार गरेर पैसा कमाउन सक्नुहुन्छ । एआईको क्षेत्रमा के भइरहेको छ, पछिल्लो अपडेट के छ, के नयाँ एआई उपकरणहरू आएका छन्, एआई संसारको समाचार, आदि जस्ता विषयमा भिडियोहरू बनाएर तपाईंले आफ्नो च्यानललाई धेरै छिटो मुद्रीकरण गर्न सक्नुहुन्छ ।

३. अनलाइन पैसा कमाउनुहोसः तपाईंले आफ्नो अनुभवबाट मानिसहरूलाई अनलाइन पैसा कसरी कमाउने भनेर बताउन सक्नुहुन्छ । मानिसहरूलाई यस्ता युट्युब च्यानलहरू धेरै मन पर्छन्, जसमा पैसा कमाउने सजिलो तरिकाहरू बताइन्छ ।

४. ई-कमर्सः तपाईंले ई-कमर्स निचमा युट्युब च्यानल बनाएर पनि धेरै कमाउन सक्नुहुन्छ । सुरुमा तपाईंले सामानहरू किन्नु पर्ने भए पनि, बिस्तारै कम्पनीहरूले आफ्ना उत्पादनहरूको प्रचार गर्न तपाईंलाई सम्पर्क गर्न थाल्नेछन् । तपाईंले महँगो विज्ञापनहरू पाउनुहुनेछ, जसले तपाईंको आम्दानी बढाउनेछ ।

५. ऋणः ऋण वर्गमा धेरै उच्च सिपिआई हुन्छ । तपाईंले धेरै च्यानलहरू हेर्नुभएको हुनुपर्छ जसले तपाईंलाई कहाँबाट ऋण लिन सकिन्छ, कहाँबाट सस्तो ऋण पाउन सकिन्छ, तपाईंको क्रेडिट स्कोर राम्रो नभएमा के गर्ने, फोनपेबाट व्यक्तिगत ऋण कसरी लिने आदि बताउँछ। यसमा भिडियोहरू बनाएर, तपाईंले छिट्टै सदस्यहरू बढाउन र राम्रो पैसा कमाउन सक्नुहुन्छ ।

६. वित्त र लगानीः पैसा बचत, लगानी र वित्तीय योजना सम्बन्धी भिडियोहरू सिर्जना गर्नुहोस् । मानिसहरू सधैं आर्थिक मार्गदर्शन खोजिरहेका हुन्छन् ।

७. शिक्षा, ट्यूटोरियल र सीपहरूः अध्ययनसँग सम्बन्धित सुझावहरू, ट्यूटोरियलहरू र करियर मार्गदर्शनमा भिडियोहरू बनाउनुहोस् । यी विद्यार्थीहरूको लागि धेरै उपयोगी छन् । कृपया यहाँको कोर्स र सीपको बारेमा बताउनुहोस् । यी भिडियोहरू कहिल्यै पुरानो हुँदैनन् । जस्तै तपाईंले भिडियो सम्पादनको बारेमा भिडियो बनाउनुभयो । यो भिडियो तपाईंको लागि सधैं उपयोगी हुनेछ । युट्युबले यस्ता भिडियोहरूको लागि राम्रो पैसा तिर्छ ।

८. पोडकास्टहरूः आगामी ४ देखि ५ वर्षहरू पोडकास्टहरूमा केन्द्रित हुनेछन् । तर पोडकास्टको नाममा मात्र कुरा नगर्नुहोस् । अर्थपूर्ण कुरा भन्नुहोस् र राम्रो व्यक्तित्व ल्याउनुहोस् । सुरुमा तपाईंको पोडकास्टमा व्यक्तित्व ल्याउन सम्भव नहुन सक्छ त्यसैले बिस्तारै सम्पर्क गर्नुहोस् । पहिले, वरपर भएका मानिसहरूसँग पोडकास्ट सिर्जना गर्नुहोस् । त्यसपछि बिस्तारै आफ्नो दायरा बढाउनुहोस् ।

९. बालबालिकासँग सम्बन्धितः यदि तपाईंको घरको कुनै बच्चा रुन्छ वा तपाईंलाई धेरै सताउँछ भने, तपाईंले उसलाई मोबाइल फोन दिन सक्नुहुन्छ । युट्युबरहरूलाई यो थाहा छ र त्यसैले उनीहरूले बालबालिकासँग सम्बन्धित भिडियोहरू बनाएर पैसा कमाइरहेका छन् । यद्यपि यसमा सिपिआइ कम छ, तर हेराइहरू यति धेरै छन् कि तपाईंले पैसा कमाउनुहुन्छ ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### सरकारको "सुशासन, पारदर्शिता, जवाफदेहीपन" शब्दावली व्यंग्य जस्ता

सरकारले संघीय संसदको प्रतिनिधि सभा र राष्ट्रिय सभाको संयुक्त बैठकलाई मन्त्रीपरिषद्को सिफरिसमा राष्ट्रपतिद्वारा सरकारको नीति तथा कार्यक्रम प्रस्तुत गरिसकेको छ । सो नीति तथा कार्यक्रमलाई सत्ता पक्षको नेकपा एमालेले उत्कृष्ट रहेको दावी गरिरहे पनि सत्ता घटककै नेपाली कांग्रेसका दोस्रो तहका नेताहरुले आलोचना गरेको छ । प्रतिपक्षले सरकारको नीति तथा कार्यक्रमलाई सरकारको असफलताको रुपमा विगतकै सुगा रताई र कर्मकाण्डी भएको बताएको छ ।

सरकारद्वारा प्रस्तुत र संसद्मा बहस हुँदैगरेको नीति तथा कार्यक्रमभित्र एउटा वाक्य छ ('भ्रष्टाचारविरुद्ध शून्य सहनशीलताको नीति लिइनेछ । पारदर्शिता र जवाफदेहिता वृद्धि गर्न भ्रष्टाचारविरुद्धको दोस्रो राष्ट्रिय नीति बनाइनेछ ।' तर व्यवहारमा भने प्रधानमन्त्री र उनको सरकारका सदस्यहरू आफ्नै सम्पत्ति विवरण सार्वजनिक गर्न डराएको आंकलन गरिएको छ । अनि कसरी पारदर्शिता कायम हुन्छ ? प्रधानमन्त्री, मन्त्रीका सम्पत्ति विवरण पहिलेजस्तै सार्वजनिक हुनुपर्ने निरन्तर विपक्षी राजनीतिक दलका साथै जनदबाब पनि बढ्दो छ तर सरकार भने नसुनेको झैं मौन छ । अनि कसरी जवाफदेहीता वृद्धि हुन्छ ?

नेपाली कांग्रेससँग गठबन्धन गरी २०८१ असार ३१ गते नेकपा (एमाले) अध्यक्ष ओलीको नेतृत्वमा गठित सरकारले एक वर्ष वित्न लाग्दासम्म पनि सम्पत्ति विवरण सार्वजनिक गर्ने कुनै चासो देखाएको छैन । प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयको वेबसाइट हेर्दा खालि प्रधानमन्त्री मन्त्रीहरूको विवरण 'प्राप्त भएको' मात्रै देखिन्छ । अर्थात्, प्रधानमन्त्री मन्त्रीहरूले कानुनी औपचारिकता पूरा गर्न सम्पत्ति विवरण त बुझाएका छन्, तर जनसाधारणले देख्न पाउने गरी सार्वजनिक गर्न चाहेका छैनन् । उनीहरूले रुचि नदेखाउँदा नागरिकतहमा भने शंका सन्देह बढ्दै गएको छ । सत्ता सञ्चालकहरूप्रति असन्तुष्टि बढ्दै जानुको एउटा कारण तिनको सम्पत्ति पारदर्शी नहुनु पनि हो ।

विसं २०५९ मा निर्मित भ्रष्टाचार निवारण ऐनको दफा ५० ले सार्वजनिक पद धारण गरेको व्यक्तिले पदमा बसेको ६० दिनभित्र र त्यसपछि हरेक आर्थिक वर्ष समाप्त भएको मितिले ६० दिनभित्र आफ्नो वा आफ्नो परिवारको नाममा रहेको सम्पत्तिको स्रोत वा निस्सासहितको अद्यावधिक विवरण नेपाल सरकारलाई बुझाउनुपर्ने व्यवस्था छ । मन्त्रिपरिषद् सदस्यहरूले त्यसको पालना त गरे होलान् तर मन्त्रिपरिषद्बाटै भएको सार्वजनिक गर्ने निर्णय चाहिँ पालना गरेको पाइएन ।

मुलुकमा बहुदलीय व्यवस्था पुनःस्थापनापछिको पहिलो जननिर्वाचित सरकारको पहिलो निर्णय थियो - 'मन्त्रिपरिषद्का सदस्यहरूको सम्पत्ति विवरण १५ दिनभित्रै सार्वजनिक गर्ने ।' प्रधानमन्त्री मन्त्रीहरूले विवरण बुझाउनेमात्र होइन सार्वजनिक नै गर्ने पारदर्शी पद्धति स्थापित भएको थियो २०४८ यता । तर, पदबाट बाहिरिएपछि अपवादबाहेक कसैले थपिएको सम्पत्ति देखाएको पाइँदैन । त्यो निर्णय अपवादबाहेक संसदीय कालखण्डमा पालना भयो । तर, २०६३ मा लोकतन्त्र बहालीपछि त्यसमा 'क्रमभंग' हुन पुग्यो । कहिले सार्वजनिक हुन्छ, कुनै बेला हुँदैन । कानुनमै सार्वजनिक गर्नुपर्ने नलेखिएको हुँदा मूलतः सम्बन्धित पदाधिकारीले नैतिक विषयमात्रै ठानेको देखियो । अर्थात्, प्रधानमन्त्री मन्त्रीका निजी मामला बनाइयो ।

लोकतान्त्रिक मुलुकमा त सम्पत्ति विवरणमात्र होइन कि कुनै निर्णय लिँदा वा काम गर्दा विवाद पैदा नहोस् भन्ने उद्देश्य राखेर 'स्वार्थ बाझिने' विषयसमेत सार्वजनिक गरिन्छन् । सम्पत्ति विवरण हकमा, लोकतन्त्र बहालीसँगै व्यापक दबाब परेमा समय घर्केपछि सार्वजनिक गर्ने प्रवृत्ति बढेको छ । यसअघि पुष्पकमल दाहालको सरकार हुँदा पनि सम्पत्ति विवरण सार्वजनिक गरिएन ।

यसपालि ओली र उनका मन्त्रिपरिषद् सदस्यहरूलाई नैतिकता वा जनता कसैको दबाब अनुभूत नभएर हुनसक्छ विवरण सार्वजनिक गर्ने रुचि जागेको छैन । सम्पत्ति विवरण सार्वजननिक गर्न जस्तो कार्यमा सत्तापक्षको गैरजिम्मेवारपनले सरकारमाथि शंका उपशंका बढाएको छ । अनि सरकारी पदाधिकारीहरूका दस्तावेज भाषणमा प्रयुक्त हुने 'सुशासन, पारदर्शिता, जवाफदेहीपन' जस्ता शब्दावली व्यंग्य जस्ता लाग्ने गर्छ ।

विसं २०५९-२०६२ सम्म अख्तियार दुरूपयोग अनुसन्धान आयोगले उच्च नेता, प्रशासक तथा शासकीय सुविधाभोगीका सम्पत्तिमा अनुसन्धान गर्ने बाटो खुलाएको थियो । त्यसरी मुद्दा चलाउँदा पहिला बुझाएको या सार्वजनिक भएको सम्पत्ति विवरणलाई आधार बनाएको थियो । उसले पदमा जाँदा र बाहिरिँदा सम्पत्ति जाँच गर्दै 'गैरकानुनी सम्पत्ति आर्जन गरी अमिल्दो र उच्च जीवनयापन' गरेको अभियोग लगाउँदै मुद्दा चलायो । तर, आयोगले अस्वाभाविक शैलीमा सम्पत्ति जोड्नेमाथि अनुसन्धान र मुद्दा चलाउने प्रक्रिया निरन्तर राख्न सकेन । प्रधानमन्त्री मन्त्रीहरूले सम्पत्ति विवरण सार्वजनिक नगर्नुलाई 'कपटपूर्ण' शासकीय कर्मका रूपमा हेरिँदै छ । उनीहरूले भ्रष्टाचार गरी अकुत सम्पत्ति जोडेकै कारण विवरण सार्वजनिक गर्न नचाहेको टीकाटिप्पणी बाक्लिँदो छ । नागरिकका आशंका चिर्न सार्वजनिक पदाधिकारीले सम्पत्ति विवरण सार्वजनिक गर्नैपर्छ । त्यसकारण पारदर्शिता प्रवर्धन गरी सुशासन कायम राख्न कानुनमै व्यवस्था गर्नुपर्ने देखिन्छ । यसमा संसद्ले समयमै सोचेर कदम चाल्न आवश्यक छ ।

# छापा पत्रकारिताः सम्भावना र रणनीति–२

● *रमेशकुमार बोहोरा*

छापा पत्रकारिताले पाठकहरूमा ठूलो विश्वास जित्न सफल भयो । समाचारको विश्वसनीयता, विश्लेषणात्मक सामग्री र राष्ट्रिय हितको विषयमा सक्रिय भूमिका खेलेर छापा पत्रपत्रिकाले आफ्नो अस्तित्व बलियो बनाएको थियो ।

छापा पत्रकारिताको स्वर्णिम युग

२०४७ सालदेखि २०५७ सालसम्मको दशकलाई नेपाली छापा पत्रकारिताको स्वर्णिम युग मानिन्छ । यो अवधिमा छापा पत्रपत्रिकाले अभूतपूर्व विकास र विस्तार हासिल गरे । राजनीतिक स्वतन्त्रतासँगै नागरिक समाजमा अभिव्यक्ति स्वतन्त्रताको आकांक्षा जाग्यो । शिक्षाको पहुँच बढेपछि जनताको चेतनास्तर पनि उक्लियो, जसले पत्रकारितालाई अझ मजबुत बनायो ।

सञ्चारमाध्यमहरू केवल समाचार सम्प्रेषण गर्ने माध्यम मात्र रहेनन्, बरु जनताको भावना, आकांक्षा र असन्तोष अभिव्यक्त गर्ने प्लेटफर्म बने । यस अवधिमा ठूला दैनिक पत्रपत्रिकाहरू स्थापना भए, साप्ताहिक र मासिक पत्रिकाहरूले लोकप्रियता कमाए, र क्षेत्रीय पत्रिकाहरूले पनि आफ्नो अस्तित्व देखाउन थाले ।

कान्तिपुर र नयाँ सञ्चार क्रान्ति

२०४९ साल फागुन ९ गते सुरु भएको 'कान्तिपुर' राष्ट्रिय दैनिकले नेपाली पत्रकारिता क्षेत्रमा नयाँ युगको सुरुवात गर्‍यो । व्यावसायिक ढंगले सञ्चालित र नविनतम पत्रकारिता शैलीमा आएको कान्तिपुरले छिट्टै लोकप्रियता हासिल गर्‍यो । समाचारको प्रस्तुति, सम्पादन शैली, पाठकसँगको संवादशीलता र विज्ञापन व्यवस्थापनमा ल्याइएको नयाँपनले अन्य पत्रपत्रिकालाई पनि प्रभावित गर्‍यो ।

'कान्तिपुर' मात्र होइन, त्यसपछि सुरु भएका 'अन्नपूर्ण पोस्ट', 'हिमालय टाइम्स', 'नागरिक' जस्ता पत्रपत्रिकाहरूले पनि आफ्नो आ-आफ्नो पहिचान बनाउन सफल भए।

व्यावसायिक पत्रकारिताको सुरुआत

यस अवधिमा पत्रकारिता पेशागत रूपमा स्थापित हुन थाल्यो । पत्रकारिता अब केवल सेवामूलक काम मात्र रहेन; यो एक सम्मानजनक, आयमूलक र स्थायी करियरको रूपमा विकास हुन थाल्यो । विज्ञापन व्यवसाय फस्टाउँदै गयो र पत्रिकाहरूले स्वतन्त्र आर्थिक मोडेल विकास गरे ।

आर्थिक स्वतन्त्रताले पत्रकारितामा सामग्रीको गुणस्तर वृद्धि गर्‍यो । अनुसन्धानमा आधारित रिपोर्टिङ, विशेष संवाद श्रृङ्खला र विश्लेषणात्मक सम्पादकीय लेखनले पाठकलाई गहिरो रूपमा आकर्षित गर्‍यो ।

साप्ताहिक पत्रिकाहरूको योगदान

'नेपाल', 'स्पोटलाइट', ' रहस्य', 'युगसम्वाद', 'हिन्दु', ' नेपाल पोष्ट','जन आस्था ', ' महिमा ', 'घटना र विचार ', ' साँघु ', ' चर्चा ', ' नयाँ करेन्ट',समकालीन', 'शुक्रबार', 'योहू' जस्ता साप्ताहिक र पाक्षिक पत्रिकाहरूले विश्लेषणात्मक रिपोर्टिङ र राजनीतिक टिप्पणीहरूमा विशेष भूमिका खेले । यिनले तत्कालीन राजनीतिका जटिल पाटा उद्घाटित गरे, जनताको आवाज सरकारसमक्ष पुर्‍याए, र नागरिक चेतनाको विकासमा योगदान पुर्‍याए ।

पत्रिकाको विस्तार क्षेत्रीय तहसम्म

केन्द्रमा मात्रै नभएर ग्रामीण भेगसम्म पनि पत्रपत्रिकाको पहुँच बढ्न थाल्यो । शिक्षाको प्रसार र यातायात सुविधाको विस्तारसँगै जिल्लास्तरमा पनि पत्रिकाहरू विस्तार भए । 'राजधानी', 'पूर्वाञ्चल सन्देश', 'पोखरा पत्रिका' जस्ता क्षेत्रीय प्रकाशनहरूले आफ्नो विशिष्ट स्थान बनाएका थिए ।

छापा पत्रकारिता र नागरिक बीचको सम्बन्ध

त्यो समय छापाका पत्रपत्रिका नागरिकको मुख्य सूचना स्रोत थिए । अखबार पढ्नु भनेको सूचना र ज्ञान प्राप्त गर्ने प्रमुख माध्यम हुनुका साथै, बिहानको अनिवार्य दैनिकी बन्न पुगेको थियो । 'पेपर आएन भने नखाएको जस्तै लाग्छ' भन्ने भावनाले पत्रकारिताको प्रभाव देखाउँथ्यो । यो दशक छापा पत्रकारिताका लागि मात्रै होइन, नेपाली समाजमा समग्र सञ्चारको क्षेत्रमा अभूतपूर्व प्रगतिको युग पनि हो ।

तर, यो स्वर्णिम युग धेरै लामो समय टिक्न सकेन । प्रविधिको तीव्र विकास, राजनीतिक अस्थिरता र सामाजिक-आर्थिक परिवर्तनहरूले छापा पत्रकारितालाई नयाँ चुनौतीको सामना गर्न बाध्य बनायो ।

चुनौतीहरूको सुरुआत

२०५७ सालतिर पुगेपछि नेपाली छापा पत्रकारिता स्वर्णिम अवस्थाबाट बिस्तारै चुनौतीहरूको दलदलमा फस्न थाल्यो । प्रजातान्त्रिक व्यवस्थाले सुरुवाती दिनमा दिएको उत्साह क्रमशः खस्कँदै गयो । राजनीतिक अस्थिरता, आर्थिक समस्याहरू, प्रविधिको विकास र सामाजिक व्यवहारमा आएको परिवर्तनले छापा पत्रिकामाथि गम्भीर प्रभाव पार्न थाल्यो ।

राजनीतिक अस्थिरता र प्रभाव

२०५२ सालमा सुरु भएको माओवादी सशस्त्र द्वन्द्वले मुलुकलाई हिंसा र अशान्तिको चपेटामा ल्यायो । युद्धकालमा स्वतन्त्र र निष्पक्ष पत्रकारिता गर्न गाह्रो भयो ।

पत्रकारहरूलाई विभिन्न पक्षबाट दवाव, धम्की र आक्रमण हुन थाले । निष्पक्ष रिपोर्टिङ गर्ने पत्रकारहरूलाई दुबै पक्ष (राज्य र विद्रोही) बाट प्रताडित बनाइयो । कुनै पत्रिकाले सरकारको आलोचना गर्‍यो भने सरकारी पक्षबाट दुःख पाइन्थ्यो;माओवादी गतिविधिहरूको समाचार लेख्दा माओवादीको रोष झेल्नुपर्थ्यो । यसले गर्दा पत्रकार हरूले आत्मसेंसरशिप (कभाी-अभलकयचकजष्उ) अपनाउन थाले र छापा पत्रकारिताको स्वतन्त्रता कुण्ठित हुन पुग्यो ।

आन्तरिक किचलो र पत्रकारिता व्यवसायमा प्रभाव

नेपालको राजनीतिमा स्थिरता नआउनु र बारम्बार सरकार परिवर्तन हुनुका असर पत्रकारितामाथि पनि पर्यो ।

मिडिया हाउसहरू राजनीतिज्ञहरू नजिकिन थाले, कतिपय मिडिया संस्थापकहरू आफैं राजनीतिक सरोकारवालासँग प्रत्यक्ष जोडिए । यसले गर्दा पत्रकारिताको निष्पक्षता र विश्वसनीयतामा प्रश्न उठ्न थाल्यो ।

पत्रिकाहरू नीतिगत स्पष्टता गुमाउँदै राजनीतिक एजेण्डा प्रवर्द्धनमा लागेको आरोप लाग्न थाल्यो ।

पाठकहरूले छापा पत्रिकामा समाचारभन्दा पनि राजनीतिक ध्रुवीकरण देख्न थाले ।

व्यावसायिक मिडिया र व्यापारीकरण

छापा पत्रकारिता आर्थिक रूपमा सुदृढ बन्न थालेपछि व्यवसायिकिकरण अत्यधिक बढ्यो । विज्ञापन आम्दानीमा निर्भरता बढेपछि पत्रिकाहरूले पाठकभन्दा विज्ञापनदातालाई प्राथमिकता दिन थाले । विज्ञापनदाता कम्पनीहरूको आलोचना गर्ने समाचार छाप्न हिच्किचाउने प्रवृत्ति बढ्यो सामाजिक उत्तरदायित्वभन्दा पनि मुनाफा प्राथमिक बन्न थालेपछि जनताले मिडिया प्रति विश्वास गुमाउन थाले । यसले सामग्रीको गुणस्तरमा गिरावट ल्यायो र पाठकहरूलाई वैकल्पिक सूचना स्रोतहरू खोज्न बाध्य बनायो ।

सूचनाको विस्फोट र पाठकको बानीमा परिवर्तन

२१औं शताब्दीको सुरुवातसँगै नेपालमा पनि इन्टरनेटको पहुँच विस्तार हुन थाल्यो । सूचना पाउन पत्रिकाको प्रतीक्षा गर्नुपर्ने समय सकियो । स्मार्टफोन, कम्प्युटर र इन्टर नेटको माध्यमबाट तत्काल सूचना पाउने संस्कार विकसित हुन थाल्यो । यसले गर्दा बिहानको चिया र पत्रिका पढ्ने चलन क्रमशः घट्दै गयो । विशेषगरी नयाँ पुस्ताले छापा पत्रिकालाई पुरानो प्रविधिको रूपमा हेर्न थाल्यो ।

धेरै मिडिया, कम गुणस्तर

२०५० पछि मिडिया हाउसहरूको संख्या बढ्दै गयो, तर गुणस्तरमा अपेक्षित सुधार भएन । प्रतिस्पर्धा चर्कंदै जाँदा सनसनीपूर्ण समाचार, अपुष्ट तथ्य र अतिरञ्जनाले भरिएको सामग्री सार्वजनिक हुन थाल्यो । विश्वसनीयता घटेपछि पाठकहरूले पनि आलोचनात्मक दृष्टिले पत्रिकाहरू हेर्न थाले । कतिपय ठूला मिडिया हाउसहरू राजनीतिक र व्यावसायिक स्वार्थमा जकडिँदा सानो, स्वतन्त्र प्रयासहरू पन्छिन थाले । यी सबै कारणहरूले गर्दा नेपाली छापा पत्रकारिता सोनेरुम जस्तो चम्किलो अवस्थाबाट बिस्तारै बादलले ढाकिएको जस्तो संकटपूर्ण अवस्थामा आइपुग्यो । तर, चुनौती यही टुंगिएको थिएन । प्रविधिको तेज विकास, डिजिटल मिडियाको उदय र सामाजिक सञ्जालको विस्फोटले छापा पत्रकारितामाथि अर्को तहको गम्भीर चुनौती थपिदियो ।

प्रविधिको विकास र डिजिटल मिडियाको उदय

२०६० सालपछि नेपालमा इन्टरनेट सेवाको विस्तारले सञ्चार क्षेत्रमा क्रान्तिकारी परिवर्तन ल्यायो । डिजिटल प्रविधिको तीव्र विकाससँगै सूचना प्रवाहको गति अत्यन्त तेज भयो ।

पहिला जहाँ समाचार छापा भएर भोलिपल्ट मात्र पाठकको हातमा पुग्थ्यो, अब अनलाइनमा केही सेकेन्डमै अपडेट हुने स्थिति आयो । यसले छापा पत्रकारिताको अस्तित्वमै ठूलो चुनौती सिर्जना गर्‍यो ।

अनलाइन मिडियाको उदय

इन्टरनेट विस्तारसँगै नेपालमा पनि अनलाइन मिडियाहरू स्थापना हुन थाले । 'इकान्तिपुर', 'नयाँ पत्रिका अनलाइन', 'सेतोपाटी', 'रातोपाटी', 'अनलाइन खबर', 'नेपाल खबर' जस्ता अनलाइन पोर्टलहरूले छिट्टै लोकप्रियता कमाए । यी मिडियाले समाचार तुरुन्तै अपडेट गर्ने, प्रत्यक्ष प्रसारण गर्ने र मोबाइलमै सूचना उपलब्ध गराउने जस्ता सुविधाहरू दिए ।

त्यसैले, पाठकहरूले छापा पत्रिकाको प्रतिक्षा गर्नुको सट्टा मोबाइल वा कम्प्युटरमा तत्काल समाचार हेर्ने बानी बसाले खासगरी नयाँ पुस्ता (१८-४० वर्ष उमेर समूह) ले छापा पत्रिका पढ्न छोडेर डिजिटल मिडियातिर सरे ।

समय र लागतको कारक

डिजिटल मिडिया पहुँचमा सरल, तत्काल र निःशुल्क हुने भएकाले सर्वसाधारणको रोजाइ बन्न थाल्यो ।

छापा पत्रिका किन्नु, पढ्न समय छुट्याउनु र वितरणको पर्खाइ गर्नु पर्ने झन्झटको साटो डिजिटल मिडियाले सजिलो र छिटो विकल्प दिएको थियो । यसले छापा पत्रिकाको पाठक संख्या घटाउन महत्वपूर्ण भूमिका खेल्यो ।

सामाजिक सञ्जालको विस्फोट

फेसबुक, ट्विटर, युट्युब, इन्स्टाग्राम जस्ता सामाजिक सञ्जालहरूको लोकप्रियताले छापा पत्रकारितालाई थप दबाबमा पारेको छ । आजको पुस्ता आफ्नो समाचार स्रोतका रूपमा परम्परागत पत्रपत्रिकाभन्दा फेसबुक वा ट्वीटर हेर्छ ।

आफ्नो मोबाइलमा आउने नाटकीय शीर्षक, छोटो भिडियो क्लिप वा आकर्षक फोटोसहितको समाचारले धेरैलाई आकर्षित गरेको छ । छापा पत्रिकाको लामो लेख वा विश्लेषणात्मक सामग्री पढ्न अहिलेका धेरै पाठकहरूमा धैर्यता घटिरहेको देखिन्छ ।

नयाँ पत्रकारिता शैली र छापा पत्रकारिताको संघर्ष

डिजिटल मिडियाले छोटो, सरल र आकर्षक सामग्री प्रस्तुत गर्न थालेको छ । "ज्भबमष्लिभ-मचाष्खभल वयगचलबष्कि" अर्थात् शीर्षक केन्द्रित पत्रकारिता हाबी हुँदै गएको छ ।

**बाँकी अर्को अंकमा**

# काक्राबारी घटनाबारे आयोजना कम्पनीको विज्ञप्ति

भक्तपुर । भक्तपुरको काक्राबारीमा जग्गा प्लटिंग गर्दै आएको निक भुजीकिक हाउजिङ प्रा.लि.ले मंगलबार प्रेस विज्ञप्ति सार्वजनिक गरेको छ । विज्ञप्तिमार्फत् उसले यसअघि प्रकाशित समाचारहरु सत्यतामा आधारित नभएको दावी गरेको छ । साथै समाचार एकपक्षीय भएको आरोप पनि लगाएको छ । यसबारे आफूहरुले पत्रकार सम्मेलन नै गरी जानकारी गराउने पनि जनाएको छ ।

प्रेस विज्ञप्ति

भक्तपुर-जिल्लास्थित भू-विकास आयोजनाबारे सार्वजनिक भ्रम र अफवाहप्रति स्पष्टिकरण विगत केही दिनदेखि सामाजिक सञ्जाल, युट्युब, अनलाइन मिडिया तथा केही प्रमुख सञ्चारमाध्यमहरूमा साविक नंखेल गाविस वडा नं. ४ (हाल सूर्यविनायक नगरपालिका वडा नं.९) घिसिङडाँडा क्राँक्राबारीस्थित भू-विकास आयोजनासम्बन्धी आधारहीन समाचारहरू प्रकाशन तथा प्रसारण भइरहेकोप्रति आयोजना सञ्चालक कम्पनीको गम्भीर ध्यानाकर्षण भएको छ ।

समाचार तथा सामग्रीहरूमा हाम्रो कम्पनीद्वारा सञ्चालित भू-विकास आयोजनाले सरकारी जग्गा, खोला, खोल्सी र सार्वजनिक संरचनाहरू अतिक्रमण गरेको जस्ता आरोपहरू लगाइएको पाइन्छ । साथै, आयोजना स्थानीय जनताको हितविपरीत सञ्चालन गरिएको भनी प्रचार गरिएको छ । यस्ता सामग्रीहरूले परियोजनाको प्रतिष्ठा, कानुनी हैसियत र दीर्घकालीन विकास योजनामाथि भ्रम सिर्जना गर्ने, गलत सन्देश प्रवाह गर्ने तथा अनावश्यक आशंका जन्माउने काम गरेको छ ।

यथार्थ विवरण

१. वडा कार्यालयबाट सिफारिस प्राप्त भै नगरपालिकामा फाइल पेश गरी निर्णयको अन्तिम चरणमा रहेको

२ आवश्यक वातावरणीय प्रभाव मूल्याङ्कन प्रक्रिया पूरा गरी सम्बन्धित सरकारी निकायबाट स्वीकृति प्राप्त गरिसकिएको छ ।

३ आयोजना संचालनको लागि सो क्षेत्रको माटोको गुणस्तर गरिएको छ ।

४ त्यस क्षेत्रमा रहेको खहरे खोल्सीहरुको हकमा पानीको बहाव मापन तयार गरिएको छ ।

५ आयोजना क्षेत्रभित्र पर्ने सरकारी पर्ति गोरेटो कुलो खोल्सीको हकमा शहरी विकास मन्त्रालय अन्तर्गत उपत्यका विकास प्राधिकरणको नियमअनुसार नै उक्त प्राधिकरणले निर्माण गर्ने प्रस्तावित नक्सा अनुसार नै सार्वजनिक सम्पत्तिको संरक्षण गरिने छ

६ शहरी विकास मन्त्रालय अन्तर्गत उपत्यका विकास प्राधिकरण केन्द्रिय कार्यालयमा निवेदन पेश गरी प्राधिकरणले गर्नुपर्ने आवश्यक निर्णय प्रक्रियाको चरणमा रहेको छ ।

यस कम्पनीले विगत लामो समयदेखि जग्गा विकास आयोजना संचालन गर्ने कममा सदैव उपत्यका विकास प्राधिकरणको नियमको पालना गर्दै स्वीकृती लिएर मात्रै आयोजना सम्पन्न गर्दै आएको छ ।

भ्रामक प्रचारप्रति हाम्रो धारणा

उक्त समाचार तथा सामाजिक सञ्जालका सामग्रीहरू सत्य तथ्य अनुसार तयार नगरी, एकपक्षीय, अपुष्ट स्रोत र नियोजित उद्देश्यका साथ सम्प्रेषण गरिएको देखिन्छ । यस्ता भ्रामक प्रचारले मात्र कम्पनीको गरिमा होइन, स्थानीय विकासमा योगदान पुर्‍याउने योजनालाई अवरोध गर्न सक्ने सम्भावना देखिन्छ ।

आगामी कदमहरू

कम्पनीले छिट्टै पत्रकार सम्मेलन आयोजना गरी सञ्चारकर्मीहरूलाई आयोजनाको प्रामाणिक विवरण, नक्सा, स्वीक्ति कागजात तथा प्रगतिको अवस्थाबारे विस्तृत जानकारी गराउनेछ । यस्ता असत्य र गलत सूचनाको खण्डन गर्न आवश्यक भएमा कम्पनी कानुनी प्रक्रिया पनि अगाडि बढाउने छ ।

हाम्रो उद्देश्य केवल व्यवस्थित, कानुनी र दिगो शहरी पूर्वाधार विकास गर्नु हो । कम्पनीले प्रारम्भदेखि नै पारदर्शिता, जवाफदेहिता र स्थानीय सहभागितामार्फत कार्य अघि बढाएको छ । हामी सञ्चारमाध्यमहरू, सरोकारवाला निकायहरू र स्थानीय समुदायलाई पुनः हार्दिक अनुरोध गर्दछौं कि कुनै पनि सूचना सार्वजनिक गर्नु अघि प्रामाणिकता जाँच गरी मात्र प्रकाशन-प्रसारण गरियोस् ।

सहयोग, समन्वय र संवादमै समृद्ध र सहमतिको विकास सम्भव छ भन्ने हाम्रो दृढ विश्वास छ । धन्यवाद ।

पुर्ण बहादुर लिम्बु
सञ्चालक अध्यक्ष
निक भुजीकिक हाउजिङ प्रा.लि.

# भक्तपुर- नगदेश बौद्ध सम्पदा दर्शन साइकल यात्रा हुने




वैशाख २३, २०८२ भगवान बुद्धको जन्म, सम्बोधिलाभ तथा महापरिनिर्वाण भएको त्रिसंयोगपूर्ण पवित्र दिन वैशाख पूर्णिमा (बुद्ध सम्वत् २५६९) को पावन अवसरमा बुद्ध जयन्ती समारोह समिति, मुनि बिहार भक्तपुरको आयोजनामा तथा साइकल कनेक्ट भक्तपुरको संयोजनमा यही वैशाख २७ गते शनिबार भक्तपुर-नगदेश बौद्ध सम्पदा दर्शन साइकल यात्रा हुँदैछ ।

सो साइकल यात्रा भक्तपुर इनाचोस्थित मुनि बिहारबाट शुरू भई इनाचो, गोल्मढी, सुकुलढोका, टौमढी, नासमना, भार्वाचो, दूधपाटी, छोंङा गणेश, अरनिको राजमार्ग, शंखधर चोक, बालकुमारी, बाहाखा बजार, हुँदै नगदेश बौद्ध बिहारमा पुगेर पुनः बाहाखा बजार, निकोसेरा, छोंङा गणेश, सिद्ध पोखरी, भक्तपुर दरबार स्क्वायर, साकोठा, इनाचो भएर मुनि बिहारमा समापन हुनेछ ।

करिब १४ किलोमिटरको यो सांस्कृतिक एवं आध्यात्मिक यात्रा बौद्ध दर्शन र शान्तिको सन्देश जन-जनमा फैलाउने उद्देश्यले आयोजना गरिएको हो । आजको अस्थिर समय, द्वन्द्व र मानसिक तनावले भरिएको युगमा बुद्धको शिक्षाले मानिसहरूलाई शान्ति, करुणा र विवेकको बाटो देखाउने गहिरो क्षमता राख्दछ। यस अभियानले बुद्धका शिक्षालाई व्यवहारमै अवलम्बन गर्ने र नयाँ पुस्तामा प्रवर्द्धन गर्ने अवसर पनि प्रदान गर्दै आएको छ ।

साइकल कनेक्ट भक्तपुरले यो यात्रा विगत चार वर्षदेखि निरन्तर आयोजना गर्दै आएको छ । यस शृंखलाको आरम्भ २०७९ सालमा "भक्तपुरका बहा-बही बौद्ध सम्पदा दर्शन यात्रा-२०७९" बाट भएको हो । त्यसपछिका वर्षहरूमा मुनि बिहार, भक्तपुर-पाटी बिहार, ठिमी बौद्ध सम्पदा दर्शन यात्रा -२०८०, नैचाल-मलिगाउँ बौद्ध सम्पदा दर्शन साइकल यात्रा -२०८१ सफलतापूर्वक सम्पन्न भएका थिए ।

यस वर्षको संस्करण "भक्तपुर-नगदेश बौद्ध सम्पदा यात्रा- २०८२ का रूपमा सम्पन्न हुँदैछ । "यस कार्यक्रमका मुख्य अतिथि मुनि बिहार भक्तपुरका प्रमुख भिक्षु विप्पसी रहनु हुनेछ । शनिबार बिहान ६ बजे शान्ति पाठ तथा बौद्ध झण्डा हस्ताणतरण पश्चात साइकल यात्रा शुरू हुनेछ । साइकल यात्रा नगदेश बिहार पुगेपश्चात मध्यपुर थिमी वडा नं ७का अध्यक्ष कृष्णकुमार प्रजापतिको विषेश आतिथ्यतामा नगदेशवासीले सहभागीहरूलाई स्वागत गर्नेछ । कार्यक्रममा प्राविधिक सहयोग जुजु बाइक्स भक्तपुरले प्रदान गर्नेछ ।"- कार्यक्रम संयोजक साइकल कनेक्ट भक्तपुरका अध्यक्ष सुमित बालाले जानकारी दिनुभयो ।

# सम्पदा यात्राको नाममा एनएएमबी बैंकको बजारमुखी पदयात्रा

भक्तपुर । २०८२ सालको बैशाख २० गते शनिबार सम्पदा दिवसको अवसर पारेर एनएएमबी बैंकले "सम्पदा यात्रा" सम्पन्न गरेको छ । उपत्यकामा रहेका आफ्ना कर्मचारीहरूलाई पिच सडकमा हिँडाएर वार्षिक कार्यक्रमको निरन्तरता दिएको छ । यो यात्राको उद्देश्य ऐतिहासिक सम्पदाको अवलोकन भन्ने दाबी गरिए पनि वास्तवमा त्यसले सांस्कृतिक संरक्षणभन्दा बढी बैंकको प्रचारमुखी चाल प्रष्ट देखिन्छ ।

यात्रा मध्यपुर थिमिको शंखधरचोक देखि पुरानो थिमि हुँदै बोदे गेटसम्मको २५०० मिटर पिच सडकमार्गमा सञ्चालन गरियो, जहाँ अधिकांश स्थानमा पैदलयात्राका लागि फुटपाथको व्यवस्था छैन । पैदलयात्राका लागि अयोग्य पिच सडकमा कर्मचारीहरूलाई हिँडाउने कार्य, "सुरक्षा, सुविधा र सम्पदा संरक्षण" को आदर्शसँग मेल खाँदैन ।

बैंकले यो कार्यक्रमलाई 'सांस्कृतिक अवलोकन' को रुपमा प्रस्तुत गरे पनि यात्रा आयोजना हुने मार्गहरू भौगोलिक दृष्टिले यातायातको चाप बढ्ने क्षेत्र हुन् । थिमि नगरपालिकाले अझै पनि पैदल यात्रीका लागि छुट्टै पैदलमार्गको व्यवस्था नगरेको अवस्थामा यस्तो यात्रा थप अव्यवस्था निम्त्याउने कार्य हो । कार्यक्रमको यात्रामार्ग क्वलाखु बालकुमारी मन्दिर, थिमि लायकू परिसर, दिगुटोलको दिगु भैरव मन्दिर, चैत्य, पाटी बिहार, नगदेशको सिद्धि गणेश मन्दिर र सुनको आँखी झ्याल रहेको सिद्धिगणेश मन्दिर प्रवेश द्वार हुँदै बोदे गेटसम्म विस्तार गरिएको थियो । यस क्रममा नगदेशको ऐतिहासिक सम्पदा सुनको आँखीझ्याल, सिद्धिगणेश मन्दिर, नगदेश दरबार र डम्पिङ साइटको छेउमा रहेको चैत्य अवलोकन गरियो ।

नगदेशमा यस अघि फोहर फाल्ने ठाउँमा अहिले चैत्य बनाइएको छ । यो कथा अरु स्थानीय तहले पनि अनुसरण गर्न योग्य देखिन्छ । सम्पदा अवलोकनको रूपमा प्रस्तुत गरिए पनि कार्यक्रमले सम्पदाको संरक्षण र सरसफाइको सवालमा कुनै ठोस सन्देश दिन सकेन ।

बादे पुगेर खाँसी पुखु, लाछी पुखु, कमल पोखरीलगायतका पोखरीहरूको भ्रमण गरे । त्यस्तै, बिस्का जात्रामा प्रयोग हुने सुइरोहरूसमेत अवलोकन गरियो । तर अवलोकन मात्रै गरेर त्यो सम्पदाको संरक्षण गर्न सकिन्छ भन्ने मान्यता त्रुटिपूर्ण छ ।

अन्तिममा बोदे दरबार परिसरमा आयोजित औपचारिक कार्यक्रममा बैंकले नेपाल सम्पदा संघलाई पाँच लाख रुपैयाँको चेक हस्तान्तरण गर्‍यो भने स्थानीय क्षेत्रलाई फोहोर राख्ने भाँडाहरू उपहार दिइयो । यो सामाजिक उत्तरदायित्वअन्तर्गतको प्रयास भए तापनि बैंकको यो प्रकारको कार्यक्रम वातावरणीय सुरक्षा, यातायातको नियमितता र सम्पदाको संवेदनशीलता प्रतिकूल बन्ने सम्भावना यथावत् छ ।

यसप्रकार, "सम्पदा यात्रा" को मूल उद्देश्य सांस्कृतिक चेतना वृद्धि भए पनि त्यसको कार्यान्वयन शैली, विशेषगरी पिच सडकमा हिँडाउने निर्णय, स्थानीय अवस्थाको संवेदनशीलता बुझ्न नसकेको देखिन्छ । यदि यस्तो अभियान साँचो अर्थमा सार्थक बनाउनु छ भने, सम्बन्धित निकायले बाटो, पैदलमार्ग, सरसफाइ र ट्राफिक व्यवस्थापनको पूर्वतयारीमा ध्यान दिन आवश्यक छ ।

सम्पदा यात्राको नाममा हिँडाइ' कार्यक्रम प्रचारभन्दा संरक्षणमुखी बनोस्, भन्ने अपेक्षा नगरवासी र सम्पदा प्रेमी सबैले राख्नु स्वाभाविक छ । साथै मध्यपुर थिमिकै धार्मिक पर्यटकीय क्षेत्रको रुपमा रहेको निल बाराही मन्दिर परिसरमा भुक्षयको कारण मन्दिर परिसर पुरै जाखिमा परेको कारण सम्पदा यात्रा बोदेसम्म सीमित गरिएको र सो सम्पदा यात्रा थिमिको पहिचान प्रचार प्रसारमा भन्दा बैकको बजारमुखी कार्यक्रम जस्तो देखिएको स्थानीयको भनाई छ ।

# फोक्सोको स्वास्थ्यको लागि उत्तम खानेकुरा

एजेन्सी । फोक्सोले हाम्रो शरीरमा अक्सिजन पुर्‍याउने र कार्बन डाइअक्साइड हटाउने काम गर्छ । यही कारणले गर्दा फोक्सोमा थोरै समस्या भए मानिसहरूलाई सास फेर्न गाह्रो हुन्छ । आजकल वायु प्रदूषण सीमाभन्दा बाहिर बढेको छ र यसका कारण फोक्सो कमजोर हुन थालेको छ । अस्वस्थ खानपान र खराब जीवनशैलीले पनि फोक्सोमा नराम्रो असर पार्छ । यदि तपाईं आफ्नो फोक्सो बलियो राख्न चाहनुहुन्छ भने, आफ्नो खानामा केही खानेकुराहरू अवश्य समावेश गर्नु पर्ने हुन्छ ।

हेल्थलाइनको रिपोर्टमा जनाइए अनुसार गाजर फोक्सोको लागि धेरै फाइदाजनक मान्न सकिन्छ । गाजरमा बिटा-क्यारोटिन र एन्टिअक्सिडेन्ट प्रशस्त मात्रामा पाइन्छ, जुन फोक्सोको स्वास्थ्यको लागि धेरै फाइदाजनक हुन्छ । गाजरले फोक्सोको सूजन कम गर्न र फोक्सोको कार्य सुधार गर्न मद्दत गर्छ । गाजरको रस पिउनाले वा सलादको रूपमा खाँदा फोक्सो बलियो हुन्छ । धूम्रपान गर्ने व्यक्तिहरूले सकेसम्म धेरै गाजर खानुपर्छ ।

आयुर्वेदमा अदुवालाई औषधिको रूपमा प्रयोग गरिन्छ । अदुवामा पाइने एन्टी-इन्फ्लेमेटरी र एन्टिअक्सिडेन्ट गुण फोक्सोको लागि धेरै फाइदाजनक हुन्छ । अदुवाले फोक्सोको सूजन कम गर्छ र तिनीहरूको कार्यप्रणालीमा सुधार ल्याउँछ । अदुवाको सेवनले चिसो, खोकी र अन्य श्वासप्रश्वास समस्याबाट पनि राहत मिल्छ । तपाईं अदुवाको चिया पिउन सक्नुहुन्छ वा आफ्नो खानामा थप्न सक्नुहुन्छ । अदुवा फोक्सोको स्वास्थ्य सुधार गर्ने एक प्राकृतिक तरिका हो ।

पालुङ्गो, मेथी, तोरीको पात र रायोको साग जस्ता हरियो पत्तेदार तरकारीहरू फोक्सोको लागि धेरै फाइदाजनक हुन्छन् । यसमा फाइबर, भिटामिन के र एन्टिअक्सिडेन्ट पाइन्छ, जसले फोक्सोलाई विषाक्त पदार्थबाट मुक्त गर्न मद्दत गर्छ । यसले फोक्सोको कार्यप्रणालीमा सुधार ल्याउँछ र शरीरबाट विषाक्त तत्वहरू हटाउँछ । हरियो पत्तेदार तरकारीको नियमित सेवनले फोक्सो बलियो र स्वस्थ राख्छ । फोक्सोलाई स्वस्थ राख्नको लागि दैनिक खानामा हरियो पत्तेदार तरकारी समावेश गर्नुपर्छ ।

ओखर खानाले दिमागलाई मात्र तिखो बनाउँदैन, फोक्सोलाई पनि फाइदा पुर्‍याउँछ। ओखरमा ओमेगा-३ फ्याटी एसिड हुन्छ जुन फोक्सोको लागि फाइदाजनक हुन्छ। यी फ्याटी एसिडहरूले फोक्सोको सूजन कम गर्न र तिनीहरूको कार्यप्रणाली सुधार गर्न मद्दत गर्छन्। यसबाहेक, ओखरमा एन्टिअक्सिडेन्ट पनि हुन्छ, जसले फोक्सोलाई प्रदूषण र अन्य हानिकारक तत्वहरूबाट बचाउँछ। आफ्नो खानामा ओखर समावेश गरेर, तपाईं आफ्नो फोक्सोलाई स्वस्थ र बलियो बनाउन सक्नुहुन्छ । बेसारमा पाइने करक्यूमिन तत्व एक प्राकृतिक एन्टी-इन्फ्लेमेटरी र एन्टिअक्सिडेन्ट हो, जसले फोक्सोको सूजन कम गर्छ र स्वस्थ राख्छ। बेसारको सेवनले फोक्सोमा अक्सिजन आपूर्ति राम्रो हुन्छ र श्वासप्रश्वासको समस्या कम हुन्छ। तपाईं दूधमा एक चिम्टी बेसार मिसाएर पिउन सक्नुहुन्छ वा खानामा थप्न सक्नुहुन्छ। लामो समयसम्म फोक्सोलाई स्वस्थ राख्नको लागि, बेसारको सही सेवन गर्नु महत्त्वपूर्ण छ ।

# कोभिडपछि दमका बिरामी बढ्दै, साना बालबालिका बढी जोखिममा



एजेन्सी । दमका बिरामीहरूको संख्या निरन्तर बढिरहेको छ । कोभिड महामारी पछि, दमले झन् कहर मच्चाइरहेको छ । दम एक पूकारले फोक्सो सम्वन्धी रोग हो जसको कारण मानिसहरूलाई सास फेर्न गाह्रो हुन्छ । विश्व दम दिवस हरेक वर्ष मे महिनाको पहिलो मंगलबार मनाइन्छ । यस दिनको उद्देश्य दमको बारेमा मानिसहरूलाई सचेत गराउनु हो । यस विशेष अवसरमा, डाक्टरबाट दमसँग सम्बन्धित महत्त्वपूर्ण कुराहरू सिकौं ।

ग्रेटर नोएडास्थित फोर्टिस अस्पतालको पल्मोनोलोजी विभागका निर्देशक डा. राजेश कुमार गुप्ताका अनुसार दम एक दीर्घकालीन रोग हो जसमा फोक्सोको वायुमार्ग सुन्निन्छ र संकुचित हुन्छ । यसका कारण, बलगम बन्न थाल्छ र सास फेर्न गाह्रो हुन्छ । वायु प्रदूषण, एलर्जी, धुलो, धुवाँ र भाइरल संक्रमणका कारण दम हुन सक्छ । यदि परिवारमा कसैलाई दम छ भने, भावी पुस्तामा पनि यो रोगको जोखिम बढ्छ ।

डाक्टरहरुका अनुसार कोभिड पछि, केही मानिसहरूमा फोक्सोको कमजोरी वा सूजनको कारण दम जस्तो लक्षणहरू देखा पर्दैछन् । हाल अस्पतालमा आउने करिब २० प्रतिशत बिरामी दमका हुन्छन् । दमले बालबालिका र वयस्कहरूको श्वासप्रश्वासलाई चुपचाप कमजोर बनाइरहेको छ । कोरोना भाइरसले मानिसहरूको रोग प्रतिरोधात्मक क्षमता कमजोर बनाएर दमलाई अझ घातक बनाएको छ । पछिल्ला ३ वर्षमा बालबालिकामा दमका बिरामी बढेका छन् । कोभिड पछि, धेरै यस्ता बिरामीहरू अगाडि आएका छन् जसलाई पहिले हल्का एलर्जीका लक्षणहरू थिए, तर अब उनीहरूमा दमको आक्रमणको आवृत्ति र तीव्रता बढेको छ ।

# काठमाडौं उपत्यकाको वायु प्रदूषण न्यूनीकरण गर्ने उपायहरू

सरोजप्रसाद श्रेष्ठ

काठमाडौं उपत्यकाको वायु प्रदूषणका बारेमा विभिन्न पत्रपत्रिका तथा सामाजिक सञ्जालमा निकै चर्चा हुने गरेको छ । काठमाडौं संसारकै सबभन्दा प्रदूषित शहरको सूचीमा पनि पटकपटक पुग्यो । केही दिन अगाडिदेखि आएको सामान्य र छिटपुट वर्षाको प्रभावले उपत्यकालाई केही राहत दिएको अवस्था छ, तर प्रदूषण उल्लेखनीय रूपमा घट्न नसकेको कुरा समाचारहरूले जनाएका छन् । उपत्यकाको वायु प्रदूषण बढ्दै गएकाले अभियानकर्ताहरूले ‘मलाई सास फेर्न देऊ, ‘साइकल चढौं, प्रदूषण घटाऔं’, ‘साइकल चढ्ने कर्मचारी कम बिरामी हुन्छन्’, ‘किन बढ्दैछ वायु प्रदूषण रु’ आदि लेख तथा नाराहरूका साथ सर्वसाधारणले भोग्नुपर्ने समस्याको समाधान खोज्न सम्बन्धित निकायलाई सामाजिक सञ्जालहरूमार्फत खबरदारी गरिरहेका छन् । सम्बन्धित निकायले वायु प्रदूषण नियन्त्रण गर्न चासो नदिएको अभियानकर्ताहरूले गुनासो गर्ने गरेका छन् ।

विभिन्न पत्रपत्रिका, सामाजिक सञ्जाल र वातावरणविद्ले वायु प्रदूषणका धेरै कारणहरू औंल्याएका छन् । अहिलेको वायु प्रदूषणका धेरै कारणमध्ये तल उल्लिखित केही बुँदाहरूलाई प्रमुख कारकका रूपमा लिन सकिन्छ ।

- सुख्खा मौसमका कारण देशका विभिन्न वनजङ्गलमा लागेको डढेलो (ललितपुर जिल्लाको दक्षिणी भेगमा लागेको डढेलो पनि) प्रमुख कारक भएको (हालै भएको वर्षाले गर्दा निभिसकेको अवस्था छ ।)

- यो समय खेतीपातीको काम सकिने र नयाँ खेतीको तयारीका लागि किसानले खेतमा काम नलाग्ने बाँकी भएका कृषिजन्य वस्तु तथा घाँसपात आदि जलाउनु (यस्तै खालको क्रियाकलाप दक्षिणी छिमेकी मुलुकमा हुने गरेकाले पश्चिमी वायुको प्रभावबाट वायु प्रदूषणलाई थप मद्दत पुगेको ।)

- विशेषतः काठमाडौं उपत्यकामा वायु प्रदूषण हुनुमा अरनिको राजमार्ग विस्तार (भक्तपुरको सूर्यविनायकदेखि काभ्रेपलाञ्चोकको धुलिखेलसम्मको सडक ६ लेनको बनाउने गरी) को अहम् भूमिका रहेको र उपत्यकाभित्रका विभिन्न ठाउँहरूमा सडक सञ्जाल विस्तार गर्नका लागि गरिएका निर्माण कार्यहरूले पनि प्रदूषणलाई थप बढावा दिएको (नेपालभरि नै सडक तथा राजमार्गहरूको निर्माण र विस्तारको कामले अत्यधिक धूलो भई वायु प्रदूषण बढेको अवस्था ।) ।

- यो वर्ष हिउँदे वर्षा नगण्य भएकाले काठमाडौं उपत्यकाको वायुमण्डल लामो समय प्रदूषित रहनु ।

- पश्चिमी वायु प्रणालीको प्रभाव कमजोर भएकाले काठमाडौं उपत्यकाको वायुमण्डलमा थुप्रिएको प्रदूषण जमिनमा झर्न वा हट्न नसक्नु ।

- पुराना सवारी साधनहरू (विशेषतः २० वर्ष र सोभन्दा पुराना) बाट निस्किने धूवाँ ।

- काठमाडौं उपत्यकाको केन्द्रीकृत विकासले गर्दा बढ्दो जनघनत्व र बसाइसराइका कारण घर निर्माणमा वृद्धि हुनु ।

सुख्खा याममा देशका विभिन्न भागमा वनजङ्गल (९०० भन्दा बढी स्थान) मा डढेलो लाग्ने भए पनि सम्बन्धित निकायले चासो नदिएको समाचारहरूले उल्लेख गरेका छन् । डढेलोलाई न्यूनीकरण गर्ने ठोस उपाय नआएको र डढेलो लागेका ठाउँहरूमा आपतकालीन रोकथामका लागि खासै तयारी नगरेको गुनासो पनि छ । सम्बन्धित निकायले यथाशक्य कार्ययोजनाहरू ल्याउन सकेको खण्डमा धनजनको क्षति न्यून हुनुका साथै वायु प्रदूषण नियन्त्रणमा सहयोग पुग्ने वातावरणविद्हरूको भनाइ छ ।

देशका विभिन्न भागमा मनसुन वर्षाभन्दा अगाडि नयाँ खेतीको तयारीका लागि खेतमा काम नलाग्ने बाँकी भएका कृषिजन्य वस्तु तथा घाँसपात ९मलका रूपमा प्रयोग गर्न० आदि वस्तुहरू जलाउनाले पनि वायु प्रदूषण बढेको वातावरणविद्हरूको तर्क छ । त्यस्ता वस्तुहरू नजलाउन र अन्य प्रविधिबाट मल बनाउन किसानहरूलाई जनचेतना अभियान चलाउन सके वायु प्रदूषण केही हदसम्म कम हुन सक्छ । सम्बन्धित निकायले विलम्ब नगरी नियमित रूपमा अभियान चलाउनु उचित हुनेछ ।

मुलुकका विभिन्न स्थानमा राजमार्ग तथा सडक विकास निर्माण र विस्तारका निर्माणाधीन आयोजनाहरूले गर्दा अत्यधिक वायु प्रदूषण भएकाले स्थानीय बासिन्दाले यसको नियन्त्रण गर्न माग गरेका समाचारहरू आएका छन् । यस्ता आयोजनाहरूले धूलो-धूवाँ प्रदूषण कम गर्न सक्ने उपायहरू अवलम्बन गर्न नसक्दा पनि अत्यधिक धूलोले गर्दा वायु प्रदूषण बढेको भनाइ छ । साधारणतया यस्ता आयोजनाहरू सञ्चालन गर्नु अगाडि प्रदूषण न्यूनीकरणका लागि वातावरणीय प्रभाव मूल्याङ्कनको पालना गर्नुपर्ने सर्त र बुँदाहरू राखिएका हुन्छन् । त्यस्ता सर्त र बुँदाहरूलाई कडाइका साथ लागू गर्न-गराउन सम्बन्धित निकायले नियमित अनुगमन गर्न सकेको खण्डमा आयोजनाहरूबाट हुने वायु प्रदूषण नियन्त्रण गर्न सहयोगी हुन सक्दछ । काठमाडौं उपत्यकाको भौगोलिक बनावट कचौराजस्तो भएकाले पनि उपत्यकाको वायुमण्डलमा प्रदूषण थुप्रिन सहज हुन्छ । त्यसैले सम्बन्धित निकायले प्रदूषण नियन्त्रण गर्न कडाइका साथ लाग्नुपर्ने देखिन्छ । काठमाडौं उपत्यकामा यस्तै अवस्था लामो समयसम्म रहेमा उपत्यकाको प्रदूषणलाई न्यूनीकरण गर्न पृथक् वातावरणीय प्रभाव मूल्याङ्कन ल्याउनुपर्ने आवश्यकता छ ।

पुराना सवारी साधनहरूले गर्दा वायु प्रदूषण बढेको भन्ने बारेमा पनि छलफल गर्नु उपयुक्त होला । सवारी साधनहरू पुराना भएपछि र समयमै मर्मतसम्भार नगरेपछि त्यसले प्रदूषण बढाउन मद्दत गर्छ । तर अहिलेको वायु प्रदूषणको अवस्था हुनुभन्दा अगाडि पनि पुराना सवारी साधनहरू सडकमा निर्बाध रूपमा गुडेकै थिए, त्यति बेला प्रदूषणको यस्तो अवस्था देखिएको थिएन भन्ने भनाइ पनि सर्वसाधारणको छ । काठमाडौं उपत्यकाको वायु प्रदूषण घटाउनकै लागि सरकारले २० वर्ष र त्यसभन्दा पुराना सवारी साधनहरू हटाउने गर्ने प्रस्ताव गरेका समाचारहरू धेरैपटक हेडलाइनमा आएको कुरा सबैलाई थाहा छ । हाम्रो जस्तो देशमा धेरैजसो सार्वजनिक सवारी साधनहरू व्यवसायमा आश्रित सवारीधनी र मजदुरहरूको दैनिक जीवन यापनको माध्यम भएको कुरालाई पनि हेक्का राख्नुपर्दछ । पुराना सवारी साधनहरू हटाएको अवस्थामा त्यसबाट उठ्ने कर-महसुल नउठेर राज्यको आम्दानीमा धेरै कमी आउन सक्छ । नयाँ सवारी साधन आयात गर्न राज्यको सञ्चित विदेशी मुद्रा पनि बाहिरिने अवस्था हुन्छ । पुराना सवारी साधनहरूलाई डिस्पोज गर्ने काम पनि चुनौतीपूर्ण हुनुका साथै त्यसका लागि ठूलै डम्पिङ साइट आवश्यक पर्ने भएकाले यसमा सम्बन्धित निकाय गम्भीर हुनुपर्छ ।

हाम्रो जस्तो देशमा पुराना वा धेरै प्रयोग भएका सवारी साधनहरूको वर्गीकरण गर्दा वर्षको गन्तीमा भन्दा किलोमिटरमा गरिनुपर्ने हो । छिमेकी मुलुक भारतमा सवारी साधनको आयु वर्ष गन्तीमा गरिँदैन, नियमित रूपमा समयमै मर्मतसम्भार गरेका सवारी साधनहरूको मापन किलोमिटरका आधारमा गरिने वेबसाइटहरूमा उल्लेख गरिएको पाइन्छ । पुराना वा बढी प्रयोग भएका सवारी साधनहरूको आयु गणनाको मापदण्ड देश अनुसार फरक-फरक रहेको पाइन्छ ।

पुराना सवारी साधनहरूलाई हटाउनेबाहेक अन्य विकल्पमा जान सकिने विज्ञहरूको भनाइ छ । सन् २०२३ मा छिमेकी मुलुक भारतको राजधानी नयाँ दिल्लीको सरकारले पुराना सवारी साधनहरूलाई विद्युतीय सवारी साधनमा रूपान्तरण गरेर चलाएको कुरा समाचारमा आएका छन् । यसतर्फ नेपाल सरकारले पनि सोच्नुपर्ने तर्क रहेको छ र यस्ता विद्युतीय सवारी साधनहरू चार्ज गर्न अहिले विद्युतको आपूर्ति सहज भएको अवस्था पनि छ ।

राज्यले बढीभन्दा बढी सार्वजनिक यातायातलाई उच्च प्राथमिकताका साथ सस्तो, सुलभ, सुरक्षित, नियमित र भरपर्दो (समयमै गन्तव्यमा पुग्ने) बनाई विस्तार गर्न सकेको खण्डमा साना सवारी साधनहरूको प्रयोग कम हुन सक्ने भएकाले प्रदूषण तथा ट्राफिक जामको समस्यामा कमी हुने कुरा अनुसन्धानले देखाएको छ । सम्बन्धित निकायले सार्वजनिक यातायात सञ्चालन गर्न बृहत् कार्ययोजना बनाई सम्भव भएका रूटहरूमा सेवा विकास र विस्तार गर्नुपर्ने देखिन्छ । ठूला वा साना बसहरू निर्बाध रूपमा सञ्चालन गर्न छुट्टै बस लेन आवश्यक पर्दछ । यसका लागि सम्बन्धित निकायले सम्बन्धित विज्ञहरूको परामर्शका आधारमा अहिलेको सडकका लेनहरूको पुनः संरचना र स्तरोन्नति गर्नुपर्ने हुन्छ ।

साइकल प्रयोगकर्ताहरूको समूह र अन्य साइकल प्रयोगकर्ताहरूले सामाजिक सञ्जालहरू मार्फत् पनि ‘साइकल सिटी’ को माग गर्दै आएका छन् । स्वच्छ र ‘नो इनर्जी’ को विकल्प साइकल र रिक्साजस्ता सवारीलाई पनि सरकारले प्राथमिकतामा राखी यसलाई प्रोत्साहन र प्रबर्धन गर्न सके साना सवारी साधनको प्रयोगमा कमी आई वायु प्रदूषण न्यून हुन सक्दछ । यसले ट्राफिक जामको समस्यालाई पनि केही हदसम्म कम गर्न सक्दछ । यसको सुरुवात काठमाडौं उपत्यकाका तीनै शहरहरूबाट गर्न सकिन्छ । यसका लागि साइकल प्रयोगकर्ताहरूलाई सुरक्षित र ढुक्क भएर गन्तव्यमा पुग्नका लागि अहिलेका सडकहरूमा साइकल लेनहरूको सञ्जाल सुरक्षित र सहज हुनु आवश्यक छ । एउटा शहरबाट अर्को शहरसम्म साइकलबाट निर्धक्क यात्रा गर्न सक्ने वातावरण हुनुपर्दछ । यसका लागि यातायात कार्यालय, ट्राफिक कार्यालय, विज्ञहरू तथा साइकल सोसाइटी आदिले सवारी चालक, साइकल चालक तथा पदयात्रीहरूलाई यससम्बन्धी पालना गर्नुपर्ने नियम-कानुनबारे जानकारी दिनुपर्दछ ।

काठमाडौं उपत्यकाको जनघनत्व बढ्नुमा केन्द्रीकृत विकासका कारणले भएको हो भन्ने उपत्यकावासीको भनाइ छ । यसरी बसाइसराइ बढ्दै गएका कारणले घर तथा अन्य पूर्वाधारहरू निर्माण कार्यहरू बढ्नुले पनि वायु प्रदूषण बढेको भनाइ छ । उपत्यकाको बसाइसराइलाई पनि नियन्त्रण गर्न यथाशक्य कार्ययोजना बनाउनुपर्ने देखिन्छ । उपत्यकाका नगरहरूमा अहिले भएका खुला ठाउँहरूलाई संरक्षण र विस्तार गर्दै हरियाली क्षेत्र बढाउनतिर पनि ध्यान जानु आवश्यक देखिन्छ । यसका साथै नयाँ बस्तीहरूमा खुला ठाउँहरू बढीभन्दा बढी विकास र विस्तार गरी बढीभन्दा बढी बृक्षारोपण गर्ने र पोखरीहरू बनाउन योजनाबद्ध तरिकाले जान सकेको खण्डमा केही हदसम्म वायु प्रदूषणलाई न्यूनीकरण गर्न सहयोगी भूमिका खेल्न सक्दछ । रूखहरूले केही हदसम्म सडकबाट उडेका धूलो र धूवाँलाई छेक्ने र धूलो रूखका पातहरूमा टाँसिने हुन्छ । त्यस्तै उडेको धूलोलाई पोखरी ताल-तलाउको आर्द्रताले पानीमा थेग्रिन जाने भएकाले वायु प्रदूषणलाई कम सहयोग गर्न सक्दछ ।

राजमार्ग र मूल सडकसँग जोडिएका कतिपय सहायक र साना सडक-मार्गहरू कच्ची तथा ग्रावेल हुनु र त्यहाँ गुड्ने सवारी साधनहरूका पहियाहरूमा धूलो र बालुवा टाँसिएर आउने भएकाले राजमार्ग र मूल सडकमा झर्ने र उड्नाले वायु प्रदूषणलाई थप सहयोग गरेको देखिन्छ । यसकारण सम्बन्धित निकायले राजमार्ग र मूल सडकसँग जोडिएका कतिपय सहायक र साना सडकमार्गहरू पक्की बनाउनु उपयुक्त हुनेछ । कतिपय देशका राजधानी तथा नगरका प्रमुख केन्द्रहरूमा धूलो र हिलोबाट प्रदूषण हुन नदिन प्रवेशनाकाहरूमा सवारी साधनहरूलाई पखालेर मात्र नगर प्रवेश गराइने प्रचलन रहेको पाइन्छ । महामारी रोग फैलिएको बेलामा सवारी साधनहरूलाई विशेष तरिकाले पखालेर कीटाणुशोधन गरेर नगर प्रवेश गराइने बेलाबखत समाचारमा सुनेका छौं । काठमाडौं उपत्यकाका सम्भव भएका नाका वा स्थानहरूमा पनि राख्न सकिन्छ । तर यो प्रणाली सञ्चालन गर्न सम्बन्धित निकायलाई आर्थिक र व्यवस्थापकीय दृष्टिले ठूलो चुनौती छ ।

उपत्यकाको वायुमा धूलोको परिमाण बढ्नुमा कालोपत्रे भइसकेका सडकको दुवैतर्फ अर्थात् दायाँ र बायाँ कच्ची वा ग्रावेल भएको ठाउँबाट सवारी साधनहरूले ओभरटेक गर्दा धूलो र हिलो पनि ल्याउन मद्दत गर्ने भएकाले पनि हो । सवारी साधनका चालकहरूले अनुशासित र संयमता अपनाएर सडकको कालोपत्रे भइसकेको भागमा गुडाएर लग्दा धूलो र हिलो कम हुन सक्दछ । सम्बन्धित निकायले सडकको दुवैतर्फ अर्थात् दायाँ र बायाँ कच्ची वा ग्रावेल भएको भागलाई धूलो र हिलो कम गर्न पक्की बनाउन पनि विचार गर्नु उपयुक्त हुनेछ ।

अन्तमा, प्रदूषण नियन्त्रणका नाममा उपभोक्ताबाट सङ्कलित अरबौं रकम कहाँ खर्च भयो भन्ने सरकारलाई थाहा नभएको कुरा पनि समाचारहरूले उल्लेख गरेका छन् । यो रकम सर्वसाधारणले पेट्रोल र डिजेल खरिद गर्दा प्रतिलिटर रुपियाँ १-१ लिई सङ्कलन गरिएको रकम हो । यो सङ्कलित रकमबाट राज्यले वायु प्रदूषण नियन्त्रणका लागि कुनै योजना नल्याएको सर्वसाधारणको गुनासो रहेको बेला ढीलो नगरी वायु प्रदूषण नियन्त्रणका लागि माथि छलफलमा आएका बुँदाहरूलाई पनि समाहित गरेर कार्ययोजना ल्याउन सकिन्छ कि ?

(लेखक काठमाडौं विश्वविद्यालयको युनि-कन्सल्टमा कार्यरत वरिष्ठ वास्तुविद् हुनुहुन्छ ।)

# फुल कनट्याक्ट किक बक्सिङको उपाधि भक्तपुरलाई



भक्तपुर । भक्तपुरमा पहिलो पटक आयोजना भएको फुल कनट्याक्ट किक बक्सिङ प्रतियोगिताको उपाधि भक्तपुरले नै राख्न सफल भएको छ ।

नेपाल किक बक्सिङ सङ्घ भक्तपुर जिल्ला समितिको आयोजनामा वैशाख १९ र २० गते आयोजित प्रतियोगितामा ३ स्वर्ण र ४ रजत पदक सहित भक्तपुरले उपाधि आफसँगै राखेको हो ।

यस्तै प्रतियोगितामा टिम द्वितिय भने मेन रोजो रङ्गशाला हुन सफल भएको थियो मेन रोजो रङ्गशालाले २ स्वर्ण सहित टिम द्वितिय भएको थियो भने १ स्वर्ण २ रजत सहित फाइट क्लब तेस्रो हुन सफल भएको थियो । यस्तै प्रतियोगिताको उत्कृष्ट खेलाडी भने महिला तर्फ अस्मिता दोङ तामाङ भएकी थिइन भने पुरुष तर्फ सुनिम श्रेष्ठ भएका थिए ।

प्रतियोगिता सुरुवात गर्दै बागमती प्रदेशका स्वास्थ्य मन्त्री किरण थापा मगरले खेलको विकास सँगै समाजको पनि विकास हुने बताउनुभएको थियो । उहाँले खेलाडी भनेका देशका गहना भएका कारण उनीहरूको वृत्ति विकासमा ध्यान दिन सके र राम्रो खेलको विकास गर्न सके हामीले विश्व विजेता हुन कहीँ जानु नपर्ने उहाँले बताउनुभएको थियो ।

पहिलो पटक भक्तपुरमा आयोजना भएको फुल कनट्याक्ट किक बक्सिङ प्रतियोगिताले भक्तपुरमा यो खेल प्रति झन् आकर्षण बढ्ने समेत उहाँले बताउनुभएको थियो ।

प्रतियोगितामा महिला र पुरुष गरी ११ तौल समूहमा खेल खेलाइएको थियो भने दुई वटा प्रो फाईटको आयोजना गरिएको थियो ।

प्रतियोगितामा भएको दुई प्रो फाइट मा सिरिस भुजु र प्रवीण मोक्तान प्रथम भएका थिए भने विशाल शाही र सुजित गुरुङ दोस्रो भएका थिए ।

यस्तै खेलमा ५१ केजी पुरुष तर्फ सन्जु सुब्बाले स्वर्ण पदक विजय गरेका थिए भने अभिनव थापाले रजत, संम्योग राई र कुशल लामाले कांस्य पदक विजय गरेका थिए ।

५४ केजी पुरुष तर्फ भने स्वर्ण आशिक कोली, रजतजगदिश विश्वकर्मा, कास्यमा तीर्थ तामाङ र सञ्जय तामाङले हासिल गरेका थिए ।

यसै गरी ५७ केजीमा विबद्र राईले स्वर्ण, ज्ञान धोज गोलेले रजत अनि सञ्जय लामा र सिसिर सुनारले कांस्य पदक हात परेका थिए भने ६३.५ केजीमा अर्जुन के.सीले स्वर्ण सुजु शाहीले रजत अनि प्रज्जलरण पहेलीले र नरेन्द्र बोम्जनले कांस्य पदक हात पारेका थिए , ६७ केजी तर्फ भने स्वर्ण शुनिम श्रेष्ठ, रजत अनिश पुजारी र कांस्य लाल ब भण्डारीले हासिल गरेका थिए, यसै गरी खेलमा ७५ कजी तर्फ भने अनिप देउलाले स्वर्ण, हार्दिक काईरालाले रजत र दिक्षन्त अधिकारीले कांस्य पदक हासिल गरेका थिए । यस्तै खेलमा खुला तर्फ भने उपेश देउलाले स्वर्ण, सुदिन कुमार शाहले रजत, एरेण ठेबा र उत्तम स्यान्तुले कांस्य पदक हात पारेका थिए ।

यसै गरी महिला तर्फ भने ५२ केजीमा अस्मिता दोङले स्वर्ण, अनिशा मगरले रजत अनि अर्मिला थिङले कांस्य पदक पाएकी थिइन, ६० केजीमा भने चन्द्र कुमारी भुजेलले स्वर्ण र डोल्मा बोम्जनले रजत पदक हासिल गरेकी थिइन, यसै गरी ५७ केजी महिलामा भने स्वर्ण बबिता कार्कीले हात परेकी थिइन भने रजत मिना कुमारी पाण्डे र कांस्य प्रमीला थिङले हात परेकी थिइन ।

भक्तपुरमा पहिलो पटक आयोजना भएको उक्त प्रतियोगिता कुनै विवाद रहित तथा चोट रहित हुँदै सम्पन्न भएको थियो । जगातीको इट्टा टाइल कारखानाको सानो हलमा आयोजना भएको उक्त प्रतियोगिताको अवलोकन गर्न भने दर्शकको घुइँचो नै लागेको थियो । वर्षका कारण खुल्ला स्थानमा प्रतियोगिता गर्न सकिएन तथापि दर्शकको साथ देखेर आफैमा अचम्म लागेको नेपाल किक बक्सिङ सङ्घ भक्तपुर जिल्ला समितिका कोषाध्यक्ष सचितानन्द बनेपालीले बताउनुभयो ।

कार्यक्रमको सभापतित्व नेपाल किक बक्सिङ सङ्घ भक्तपुर जिल्ला समितिका अध्यक्ष कृष्णराम जाकिबञ्जारले गर्नुभएको थियो भने खेलको मुख्य निर्णायकको भूमिका भने राजु सिंह बजिखोंले गर्नुभएको थियो । दुई दिन सम्म चलेको उक्त प्रतियोगितामा २० जिल्लाबाट खेलाडीहरूको सहभागिता रहेको थियो ।

प्रतियोगितामा उत्कृठ खेलाडी तथा मेडल विजेता खेलाडीहरूलाई बागमती प्रदेश खेलकुद विकास परिषद्का सदस्य सचिव दीपक लामाले पुरस्कृत गर्नुभएको थियो ।

पुरस्कार वितरण गर्दै उहाँले यो पटकको खेल बन्द हल भित्र भए पनि आगामी दिनमा भने भक्तपुरको पाँचतले वा दत्तात्रयमा खेलको आयोजना गर्न आग्रह समेत गर्नुभएको थियो ।

यस्तै खेलमा सूर्य विनायक नगरपालिकाका नगर प्रमुख वासुदेव थापा, सूर्य विनायक नगरपालिका वडा नम्बर ८ का वडा अध्यक्ष पुष्पराज बस्नेत, १० का वडा अध्यक्ष शिवराम राउत , बागमती प्रदेश बोर्डकी सदस्य सुनिता गौतम, किक बक्सिङका संरक्षक तथा संस्थापक अध्यक्ष दीपक श्रेष्ठ, कराते महासङ्घका रेफ्रि काउन्सिलका उपाध्यक्ष प्रकाश मोहन द्यौभडेल, कराते भक्तपुरका अध्यक्ष राजन चित्रकार प्रशिक्षक सन्तोष श्रेष्ठ, रवीन्द्र लाछिमसु लगायतका महानुभावहरूको उपस्थिति रहेको थियो । कार्यक्रम संचालन भने सितोरियो करातेका जिल्ला उपाध्यक्ष रामशरण त्यातले गर्नुभएको थियो ।

## सरकारको....

दिनुपर्नेलगायत विषय नीति तथा कार्यक्रममा स्पष्ट ढङ्गले आउन नसकेको शर्माको भनाइ छ। मुलुकको समग्र अर्थतन्त्रमा नै पुनःसंरचना गरेर जानुपर्नेमा उनले जोड दिए। भ्रष्टाचार निवारण र सुशासन कायम गर्नका लागि सार्वजनिक पद धारण गरेका व्यक्तिहरूको सम्पत्ति छानबिनको पनि उनले माग गरे। त्यस्तै, जनताको अपेक्षाअनुसार काम हुन नसकिरहेका कारण व्यवस्थाप्रति नै निराशा बढिरहेका बेला विगतकै निरन्तरताको रटान र पुरानै कुरा आएको शर्माले बताए। लगानी प्रवर्द्धनमा बाधक कानुनलाई संशोधन तथा खारेज, अनावश्यक प्रशासनीय संयन्त्र खारेजलगायत विषमा सरकार गम्भीर हुन नसकेको आरोप शर्माको छ। दोहोरो अङ्कको आर्थिक वृद्धि हासिल गर्नका लागि नीतिगत, प्रक्रियागत र व्यावहारिक सुधार गर्ने लक्ष्यसहित नीति तथा कार्यक्रम आउनुपर्नेमा त्यसो हुन नसकेको सांसद शर्माको भनाइ छ।

सांसद डा अमरेशकुमार सिंहले समावेशी र समानुपातिकसम्बन्धी व्यवस्थामा सरकार अनुदार रहेको आरोप लगाए। नीति तथा कार्यक्रममार्फत शिक्षा र स्वास्थ्य क्षेत्रलाई तहसनहस पार्न खोजिएको पनि उनको भनाइ छ। त्यस्तै, सडक पूर्वाधार, पुललगायत संरचना कमजोर रहेको उनको भनाइ छ। नक्कली भुटानी शरणार्थी प्रकरण माथिको छानबिन, वाइडबढीको घोटाला छानबिन माथि कहाँ पुग्यो भनेर उनले संसद्मा प्रश्न गरे। प्रदेशहरूले पैसा लिएर बजेट बाढ्ने गरेको र यो प्रवृत्ति प्रदेशहरूले सङ्घ सरकारबाट सिकेको उनको भनाइ छ।

सांसद शक्तिबहादुर बस्नेतले आगामी आर्थिक वर्षको नीति तथा कार्यक्रम पश्चगमनमुखी, निराशामुखी र 'सेन्टर टु राइट' शैलीको रहेको बताए। नीति तथा कार्यक्रमले मुलुकको विद्यमान अवस्था, आवश्यकता, अवसर र चुनौतीलाई विश्लेषण गर्न नसकेको उल्लेख गर्दै उनले सरकारले समस्याको केन्द्रमा पुग्न नचाहेको आरोपसमेत लगाए। अहिलेको समस्या नीतिमा, संस्थागत व्यवस्थामा, विकास मोडलमा वा आचरणमा हो भनेर स्पष्ट हुनुपर्ने बेला आएको आवश्यकता उनले औंल्याए।

अर्का सांसद वर्षमान पुनले सरकारले संसद्मा पेस गरेको नीति तथा कार्यक्रमको गन्तव्य हेर्दा अल्मलिएको र कतिपय अवस्थामा पछाडि फर्कन खोजेको जस्तो देखिएको बताए। शिक्षा र स्वास्थ्यमा राज्यको दायित्व बढाउन अति आवश्यक रहेकोमा नीति तथा कार्यक्रमले त्यसलाई सम्बोधन नगरेको पुनको आरोप छ। नीति तथा कार्यक्रम पेस हुनुपर्नेमा नीति मात्रै पेस गरेको कार्यक्रम पेस गर्न नसकेको उनको भनाइ छ। कार्यक्रम पेस नगरेर बजेटमा चलखेल गर्न खोजेको पुनले उल्लेख गरे। त्यस्तै, सरकारले नीति तथा कार्यक्रमम र बजेटका सिद्धान्त तथा प्राथमिकता संसद्मा ढिला प्रस्तुत गरेर बजेटमाथि छलफल गर्ने समय घटाउन खोजेको बताए।

त्यस्तै, १६ औं आवधिक योजनाले भनेको 'सुशासन, सामाजिक न्याय र समृद्धि' को भावनाअनुसार नीति तथा कार्यक्रम आउन नसकेको पुनले बताए। सुशासन प्रवर्द्धनका लागि के गर्ने भन्ने कुरा नीति तथा कार्यक्रममा स्पष्ट नरहेको सांसद पुनको भनाइ छ। त्यस्तै, खैरो सूचीबाट बाहिर निस्कने स्पष्ट कार्यनीति आउन नसहेको उनले उल्लेख गरे। बजेटको स्रोत व्यवस्थापन चुनौतीपूर्ण रहेको, सङ्घीयता कार्यान्वयन र अधिकारको हस्तान्तरण प्रभावकारी बन्न नसकेको लगायतका विषय उनले संसद्मा उठाए।

अर्का सांसद रोशन कार्कीले अहिलेको सरकारको कार्यशैलीले गणतन्त्रलाई संस्थागत गर्ने नभई सिध्याउने बताए। रूग्ण र सम्पन्न हुन नसकेको आयोजना खारेज गर्ने कुरा नीति तथा कार्यक्रममा परेकोमा त्यस्ता आयोजनासँग जोडिएका सम्बन्धित पदाधिकारीलाई दण्डित गरिनुपर्ने पनि उनको सुझाव छ।

शिक्षाको क्षेत्रमा व्यापार सुधार गर्ने तथा सामुदायिक विद्यालयको भौतिक सम्पत्ति सुरक्षित गर्नेतर्फ ध्यान पुऱ्याउनुपर्ने उनको भनाइ छ। यसै आर्थिक वर्षमा कृषि मल कारखाना स्थापना गर्ने कार्यअघि बढाउने विषय नीति तथा कार्यक्रमा राख्नुपर्ने सुझाव उनले दिए। सहकारी नीतिको पुनरावलोकन, वनमा खेर गएका काठमाको उपयोगजस्ता विषय सरकारको नीति तथा कार्यक्रममा राखिनुपर्ने सुझाव सांसद कार्कीले दिए।

## २०७२...

लागि नीतिगत र संरचनागत सुधारमा केन्द्रित रहेको बताए।

सूचनाको हकको कार्यान्वयन अझै पनि फितालो रहेको भन्दै मन्त्री गुरुङले सूचनाको हकसम्बन्धी ऐनलाई समयानुकूल परिमार्जन गरी संरचनागत सुधार गरेर अघि बढ्न सरकार तत्पर रहेको बताए। उनले सूचनाको हकसँग जोडेर सुशासन प्रवर्धन गर्ने अभियानमा सरकार प्रतिबद्धताका साथ लागिपरेको उल्लेख गरे। "सुशासन कायम गर्न अहिले ठुल-ठुला चुनौतीहरु छन्, त्यसलाई व्यवस्थित गर्न पनि सूचनाको हकलाई व्यवस्थित गरिनुपर्ने अपरिहार्यता छ", सञ्चारमन्त्री गुरुङले भन्नुभयो, "सरकार र राज्यका निकायले गर्ने निर्णय पारदर्शी र जनउत्तरदायी हुनुपर्छ भन्ने हो, त्यसैले सूचनाको हकसँग सुशासन जोडिएको छ।"

मन्त्री गुरुङले सूचनाको हकलाई प्रदेश र स्थानीय तहसम्म विस्तार गर्न मन्त्रालयले पहलकदमी लिइरहेको जानकारी दिए। सूचनाको हकको प्रभावकारी प्रवर्धनमा तीन तहको सरकारको उत्तिकै महत्त्वपूर्ण दायित्व भएकाले सूचना आयोगको संयन्त्रलाई संघ, प्रदेश र स्थानीय तहमा संरचना विस्तारका लागि सरकार लागिपरेको उनको भनाइ छ।

उक्त प्रयोजनका निम्ति हालै सञ्चारमन्त्रीको अध्यक्षतामा सातै प्रदेशका मन्त्री एवम् सरोकारवालाको बैठक बसेर संरचना विस्तारका लागि बजेट र जनशक्ति व्यवस्थापन आदि विषयमा गहन छलफल गरिएको उनले जानकारी दिए।

मन्त्री गुरुङले सूचना आयोगसम्बन्धी पुरानो कानुनलाई समयानुकूल बनाउन आवश्यक रहेको औंल्याए। उनले नागरिकलाई सूचनाको सहज र सरल रुपमा पहुँच पुऱ्याउने उद्देश्यले संवैधानिक र कानुनी प्रबन्ध तथा संस्थागत र संरचनागत व्यवस्था पनि भएको तर, जनताको सूचनाको साँच्चिकै प्रत्याभूति कत्तिको गर्न सकिएको छ। त्यसको कार्यान्वयन र अनुगमन हुनसकेको छ कि छैन त्यो महत्त्वपूर्ण कुरा रहेको बताए।

राष्ट्रिय सूचना आयोगका प्रमुख सूचना आयुक्त डा सुरेशप्रसाद आचार्यले नागरिकको सूचनाको अधिकार प्रत्याभूत गर्ने दिशामा आयोग निरन्तर प्रयत्नरत रहेको उल्लेख गरे। सुशासन र पारदर्शिता कायम गर्ने औजारका रुपमा सूचना आयोगले भूमिका निर्वाह गरिरहेको भन्दै उनले यसको संरचनालाई प्रदेश र स्थानीय तहसम्म विस्तार गर्न पहलकदमी भइरहेको जानकारी दिए।

प्रमुख सूचना आयुक्त आचार्यले सूचना लुकाउने प्रवृत्ति राज्यका तहमा मात्रै नभई निजी क्षेत्रमा पनि व्याप्त रहेको भन्दै नागरिकको सुसूचित हुने अधिकारको सूनिश्चितताका लागि सबै जिम्मेवार भएर लाग्नुपर्नेमा जोड दिए। सम्मानित व्यक्तिका तर्फबाट वरिष्ठ पत्रकार तारानाथ दाहालले सूचनाको हकको कार्यान्वयनको अवस्था अझै सन्तोषजनक नरहेको धारणा राखे। सूचनाको हक विकासको सुशासनको बलियो आधार भए पनि यसको सदुपयोग हुन नसकेको उनको भनाइ थियो।

आयोगका सचिव दीर्घराज मैनालीले आयोगको गतिविधिबारे जानकारी गराएको थियो। आयोग स्थापनाताका १२ वटा सूचना नपाएको गुनासोको पुनरावेदन परेकामा हाल यो सङ्ख्या झण्डै एक हजार ५०० रहेको आयोगले जानकारी दिएको छ।

नेपालको संविधान २०७२ को धारा २७ र सूचनाको हकसम्बन्धी ऐन २०६४ ले नागरिकलाई आफ्नो वा सार्वजनिक निकायको सार्वजनिक सरोकारको सूचना प्राप्त गर्ने अधिकारको 'ग्यारेन्टी' गरेको छ। नेपाली नागरिकको सूचनाको हकको संरक्षण, संवर्द्धन र प्रचलनका लागि स्वतन्त्र राष्ट्रिय सूचना आयोग रहने व्यवस्था छ। सोही बमोजिम विसं २०६५ मा आयोगको स्थापना भएको थियो।

## नेपाल....

तयार गरेपछि मात्र प्रशासनले आवश्यक कारबाही प्रक्रिया अगाडि बढाउने प्रमुख जिल्ला अधिकारी अर्यालले बताए। सूर्यविनायक नगरपालिका र वडा कार्यालयलसँग जग्गा सम्याउने स्वीकृति लिएर व्यवसायीहरूले अनधिकृत रुपमा जग्गा प्लटिङ गरिरहेको नगरपालिकाले जनाएको छ। एकै स्थानमा ३० भन्दा धेरै एक्सकाभेटर प्रयोग गरी भिरालो जमिन सम्याइरहेको र प्लटिङ गर्न उपत्यका विकास प्राधिकरणले तत्कालका लागि स्विकृत नदिएका कारण स्वीकृति लिएर मात्रै प्लटिङ गर्न प्राधिकरणका पदाधिकारीहरूले निर्देशन दिएका छन्।

वन क्षेत्र मिचेर प्लटिङ भइरहेकाले वन ऐन अन्तर्गत कारबाही हुने डिभिजन वन कार्यालयले जनाएको छ। नापी कार्यालयले उक्त क्षेत्रमा वन क्षेत्र र निजी जग्गा सीमांकन गरिसकेको छ। उक्त प्लटिङ निक भुजिकिक हाउजिङ कम्पनीले गरिरहेको छ। प्लटिङ गर्दा खानेपानीका मुहान समेत पुरिएको स्थानीयहरूको भनाइ छ।

## थिमिका....

केही दिनपछि चैत २३ गते महाप्रबन्धक यादवको कार्यकाल सकिएपछि विभिन्न प्रक्रिया मिलाउँदा मिलाउँदै कम्पनी सञ्चालनमा ढिलाई भएको त्यहाँका कर्मचारीले बताएका छन्।

कम्पनीमा आगजनीपछि आफ्नो रोजीरोटी नै गुम्ने हो कि भनेर चिन्तामा रहेका उत्पादन शाखाका कामदार उत्पादन सुरु भएपछि नयाँ आशा पलाएको बताउँछन्।

९ वर्षदेखि कम्पनीमा कार्यरत सुन्तली रोका भन्छिन्- 'आगजनी भएको अर्को दिन कार्यालय आउँदा कम्पनी फेरि सञ्चालन होला र काम पाइएला भन्ने आशा नै मारेका थियौं। तर ढिलै भएपनि उत्पादन सुरु भयो। काम पायौं खुशी लागेको छ। बचेका फर्निचर पनि आगजनीको धुवाँले फोहोर भएका थिए भने भाँडाकुँडाहरु पनि त्यस्तै थिए। हामी कर्मचारी मिलेर सरसफाईमा धेरै समय लाग्यो। अहिले उत्पादन तथा प्याकेजिङको काम सुरु भएको छ। जे होस आशा पलाएको छ' कल्पना ढुङ्गेलले भनिन्।

सानो ठाउँमा काम गर्नुपरेकाले सञ्चोको रागले आँखा पोल्छ। तर पनि यो घटना पछि रोजगारी गुम्छ कि भन्ने डर थियो अब भने ढुक्क भएको कामदार सविता फुयाँलले बताइन्।

उत्पादनमा कार्यरत प्रमिला तिमिल्सिना पनि हातमुख जोर्ने भयबाट मुक्त हुन पाएकोमा खुशी प्रकट गर्छिन्। सुन्तली, कल्पना, सविता र प्रमिलाजस्तै उत्पादन शाखामा ४० जना महिला कामदा रहेका छन्। पहिले फराकिलो ठाउँमा मेसिनबाट काम गर्दा सहज हुने गरेको बताउने उनीहरु अहिले साँघुरो ठाउँमा धेरै जना बसेर काम गर्नुपर्दा असहज भए पनि उत्पादनले निरन्तरता पाउँदा सन्तोष लागेको बताउँछन्। कम्पनी विस्तारै पहिलेकै अवस्थामा आउने विश्वास यिनीहरुले लिएका छन्।

उत्पादन तथा ल्याबको काम हुने भवन नै पुरै ध्वस्त भएपछि ल्याब र उत्पादनका लागि चाहिने मेसिन तथा उपकरण सबै ध्वस्त हुँदा २८ करोड बराबरको क्षति भएको प्रारम्भिक अनुमान छ। अहिले विभिन्न शाखाले वास्तविक क्षतिको विवरण संकलन गरिरहेको कार्यवाहक महाप्रबन्धक रिजालले बताइन्। यही साताभित्र वास्तविक विवरण आउने उनको भनाई छ।

रिजालका अनुसार क्षतिपूर्तिका लागि सरकारलाई निवेदन दिइसकिएको बताएकी छिन्। वास्तविक विवरण आइसकेपछि सरकारले क्षतिपूर्तिको प्रक्रिया अगाडि बढाउनेछ। तत्काल कम्पनीमा भएको क्षतिका लागि संघीय सचिवालय निर्माण तथा व्यवस्थापन कार्यालयले क्षति भएका सिसा फेर्ने, रंगरोगन गर्ने, जलेका गाडी पन्छाउने, सुरक्षाको घेराबार गर्ने काम गरेपछि कार्यालयमा बसेर काम गर्ने वातावरण बनेको उनले बताइन्।

आगलागीपछि बजारमा सञ्चो छैन भनेर जुन किसिमले हल्ला फिँजाइएको थियो, त्यस्तो अवस्था छैन। 'हाम्रो भण्डारण कक्ष सुरक्षित रहेकाले स्टक रहेको सञ्चोले अहिलेसम्म बजार धानीरहेको छ,' योजना तथा बजार व्यवस्थापन शाखा प्रमुख गोविन्द शर्माले भने। यद्यपि हातबाट उत्पादनका सबै काम गर्नुपर्ने भएकाले बजारको मागअनुसार धान्न कठिनाइ भइरहेको बताउँदै प्रमुख शर्मा भन्छन्, 'यसवर्ष ६७ लाख थान सञ्चो लगायतका जडिबुटीयुक्त तेल उत्पादन गर्ने लक्ष्य कम्पनीले लिएको थियो। त्यो लक्ष्य पूरा गर्नकै लागि भनेर कम्पनीका कर्मचारी तथा उत्पादन शाखाका कामदार आफैं खटेर आगलागीबाट क्षति पुगेका कक्ष सफा गरेर सक्ने जति काम गरिरहेका छौं।'

गत आर्थिक वर्ष कम्पनीले धेरै राम्रो उत्पादन तथा बिक्री गरेको थियो। 'उत्पादनबाट ८० प्रतिशत बिक्री हुन्छ भने २० प्रतिशत स्टक रहन्छ त्यही स्टकले अहिले बजार धानेको छ' शर्माले थपे, 'सरकारी कम्पनी भए पनि आफ्नै बलबुँताले सञ्चो उत्पादन गरी त्यही रकमबाट कर्मचारी पालेर सञ्चालन भइरहेको कम्पनीले अनाहकमा ठूलो क्षति बेहोरेको छ। पहिलेकै अवस्थामा पुर्याउन कठिनाइ छ। यसमा सरकारले समयमै ध्यान दिनुपर्ने देखिन्छ।'

सरकारी स्वामित्वमा रहेको नेपाल औषधी लिमिटेड, सिंहदरबार वैद्यखाना लगायतका कम्पनी घाटामा चलिरहेका बेला जडिबुटी उत्पादन तथा प्रशोधन कम्पनी लिमिटेडले राम्रो प्रगति गरिरहेको थियो। आन्दोलनका नाममा अराजक भीडले कम्पनी खरानी बनाएपछि संस्थाको भविष्यलाई लिएर अनेक प्रश्न उठेका छन्। आगजनी लगत्तै महाप्रबन्धकको कार्यकाल सकिनु र करिब एक महिनासम्म नेतृत्वबिहीनको अवस्थाले पनि अवस्था अन्योलपूर्ण बनेको थियो।

हुन त कार्यबाहक महाप्रबन्धकको जिम्मेवारी उपल्लो तहका अर्का अधिकारीलाई दिइएको छ। तर महाप्रबन्धकमा जस्तो कार्यकारी अधिकार नहुँदा धेरै काम रोकिएको शर्माले बताए। तालुकदार वन तथा वातावरण मन्त्रालयले छिट्टै महाप्रबन्धक नियुक्त गर्ने आश्वासन दिएको बताइएको छ। कार्यवाहक महाप्रबन्धक रिजाल भन्छिन्- 'पहिलेकै गति लिन मुख्यत उत्पादनमा जोड दिनुपर्छ। कम्पनी भनेको खेती गर्ने, उत्पादन गर्ने र बिक्री गरेर माथि उठ्ने हो। त्यसैले सकेसम्म उत्पादनलाई निरन्तरता दिने प्रयासमा हामी लागेका छौं। खेतीको काम पनि भइरहेको छ भने बिक्रीको समस्या छैन।' मेसिन हुँदाको जस्तो छिटो उत्पादन नभए पनि काम नरोकिएको जानकारी दिँदै रिजालले तत्काल पूर्वाधार र मेसिन खरिद गरिदिन सरकारसंग आग्रह गरिन्।

## सफल....

मन्दिर परिसर सरोकार समिति गठन गरेका छन्। सरोकार समितिले मन्दिर वचाउनका लागि सरोकारवाला निकायहरुलाई ध्यानाकर्षण गराउने योजना राखिएको जनाएको छ।

मन्दिर जोगाऔं अभियानमा जुटेका एकजना अभियन्ता सूर्य श्रेष्ठले आफू स्थानीयबासी नभए पनि मन्दिर जोगाउने अभियानमा जुटेको बताउँछन्। अहिलेसम्म मध्यपुर थिमिमा मदनकृष्ण श्रेष्ठ, मदनसुन्दर श्रेष्ठ र सुरेन्द्र श्रेष्ठ मेयर भए, उनले भने, यी तीनै जना मेयरले यो मन्दिरलाई जोगाउन खासै पहल गरेको देखिएनन्।

मन्दिर बचाउन स्थानीय स्वयमले पहलकदमी थालेपछि निलवाराही मन्दिरको संरक्षण र पहिरो नियन्त्रणका लागि हामीले गरेका ठोस प्रयासहरू भन्दै मध्यपुर थिमि नगरपालिकाका उपप्रमुख विजयकृष्ण श्रेष्ठले लामो फेहरिस्त सार्वजनिक गरेका छन्। के साँच्चै निलवाराही मन्दिरको हेरचाह नगरिएको हो ? भन्दै उनले यसरी प्रश्न उठिरहँदा, हामीले २०७९ सालमा निर्वाचित भएदेखि निलवाराही क्षेत्रलाई उच्च प्राथमिकतामा राखेर संरक्षणका कामहरू गरिरहेको दावी गरे। '२०७२ सालदेखि गम्भीर पहिरो शुरु भएपछि यसलाई नियन्त्रण गर्न दीर्घकालीन दृष्टिकोण आवश्यक थियो। त्यस अनुसार गरिएको कार्यहरू निम्न छन्, उनले लेखेका छन्।

निलवाराही पश्चिमतर्फको संरक्षणका लागि वर्षातमा सयौं टिपर वालुवा, माटो बग्ने ठाउँको सानु वनदेखि दुवाकोट मोडसम्म ढुङ्गाको बाल लगाई माटो बग्नबाट रोकिएको उनले बताए। निलवाराही जङ्गलको पश्चिम भागमा झण्डै ४ रोपनी सार्वजनिक जग्गा अवैध रूपमा भाडामा लगाइएकोमा पहिरो निरीक्षणको क्रममा पत्ता लागेपछि नगरपालिकाले त्यसलाई फिर्ता लिई संरक्षण गरिसकेको, उत्तर पश्चिम क्षेत्रमा करिब २ रोपनी १४ आना सार्वजनिक जमिनमा वाल लगाई संरक्षण गरिएको, बजेट सुनिश्चितता गरेको दावी उनले गरे। प्रधानमन्त्री, मन्त्रीहरू, योजना आयोगसम्म निरन्तर पहलपछि आर्थिक वर्ष २०८०/८१ म १० करोड (चक्रपथसहितको पहिरो नियन्त्रणका लागि), ७ करोड (विशेष पहिरो नियन्त्रणका लागि) बिनियोजन भई ठेक्का प्रक्रिया अन्तिम चरणमा पुगेको उनले जनाए। तर पनि पश्चिम पाखामा प्लास्टिक ओढाउनुबाहेक केही भएको छैन।

श्री निलबाराही माँजु मध्यपुर थिमि नगरपालिकाको पुरानो र ऐतिहासिक मन्दिर हो। करिब ४०० रोपनी जंगल क्षेत्र समेटिएको यो मन्दिर क्षेत्रको ठाउँठाउँमा भूक्षय भई मन्दिर नै जोखिममा परेको वर्षौं भएको छ। मध्यपुर थिमि नगरपालिकाका तत्कालिन मेयर मदनसुन्दर श्रेष्ठले सात वर्ष अगाडि नगरपालिकाको फोहोर उक्त जंगलमा पुरेर पहिरो नियन्त्रण गर्ने योजना ल्याएको थियो। तर निलबाराहीको जंगल साँस्कृतिक, धार्मिक र तान्त्रीक आस्थासंग बाँधिएको हुँदा जंगलमा फोहोर डम्प गर्ने कुरामा स्थानीय जनता असहमत भए। र निलबाराही इको पार्क नामाकरण गरिएको विदेशी सहयोग परियोजना रोकियो।

परियोजना रोकिए पनि पहिरो नियन्त्रणका लागि हरेक वर्ष बजेट राखेको छ भन्ने, सर्भे गर्ने तर फिल्डमा काम नहुने क्रम चलिरहेकोले निलवाराही मन्दिर प्राङ्गणमा स्थानीय/ भक्त भेला गरी सरोकार समित बनाइएको स्थानीले बताए। भेलामा स्थानीय टिगनी, बोदे, नगदेश, चपाचो, बालकुमारी, भक्तपुर, ललितपुर लगायतका ठाउँहरुबाट भक्तहरु मन्दिर प्राङ्गणमा छलफलमा सहभागी रहेका थिए।

इमेल: thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# समावेशी निम अवार्डको आठौं संस्करण सम्पन्न

काठमाडौं । राष्ट्रिय समावेशी निम म्युजिक अवार्ड २०२५ को आठौं संस्करण गत शनिबार सम्पन्न भएको छ । पावर ईन्टरनेशनल मिडिया नेपाल (पिम नेपाल) को आयोजनामा काठमाण्डौमा सम्पन्न भएको उक्त कार्यक्रममा वन तथा वातावरण मन्त्री ऐन बहादुर शाही ठकुरीको प्रमुख आतिथ्यता रहेको थियो । कार्यक्रम पिम नेपालका सल्लाहकार तथा नेपाल चलचित्र कलाकार संघका अध्यक्ष मोहन निरौला सभापतित्वमा भएको थियो । कार्यक्रममा मन्त्री शाही ठकुरीले यस्ता कार्यक्रमहरुले भाषा, संस्कृति, गीत संगीत, चलचित्रमा क्रियाशिल ब्यक्तित्व तथा प्रतिभालाई प्रोत्साहन मिल्नुका साथै गीत संगीतको विकासमा टेवा पुग्ने विश्वास व्यक्त गरे ।

कार्यक्रममा पहिलो नेपाली सिनेमा“आमा“की अभिनेत्री चैत्यदेवी सिंह, आमाकै अर्की अभिनेत्री बसुन्धरा भुसाल, वरिष्ठ गायिका देवीका बन्दना, प्रहरी अतिरिक्त महानिरीक्षक तथा गीतकार टेक तामाङ, डा. सुभाष घिमिरे लगायतका चलचित्र, गीत संगीत, समाजसेवा तथा विभिन्न क्षेत्रमा सक्रिय व्यक्तित्वहरुको उपस्थिति रहेको थियो ।

कार्यक्रममा यस वर्षको संगीत रजत सम्मानबाट वरिष्ठ संगीतकार सुरेश अधिकारी सम्मानित भएको छ भने संगीत पत्रकारिता पुरस्कार रंग पत्रकार करिष्मा केसीलाइ प्रदान गरिएको थियो । त्यस्तै पिम नेपाल विशिष्ट चलचित्रकर्मी सम्मान विशिष्ठ कलाकार उत्तम केसी, पिम नेपाल टेलिभिजन संचारकर्मी सम्मान चर्चित संचारकमी राज श्रेष्ठ, पिम नेपाल डायस्पोरा सम्मान संगीतकार केशव पौडेल, पिम नेपाल युवा प्रतिभा सम्मान गीतकार/पर्वतारोही पुरुषोत्तम सानु, युवा उद्यमी सम्मान सुरेश कार्की र लोक गायक शुशिल ज्ञवाली तथा गायिका अनिता कुँवरलाई सम्मानित गरिएको थियो ।

“नेपाली हुनुमा गर्व गरौं कला र संस्कृतिको जगेर्ना गरौं” भन्ने मुल नारा का समथ विगत ८ वर्षदेखि आयोजना हुँदै आएको निम अवार्डले नेपालमा बोलीने विभिन्न भाषाभाषिका गीत र गीतका भिडियोहरुलाई प्रोत्साहन स्वरुप अवार्ड तथा सम्मान प्रदान गर्दै आईरहेको छ । सम्पुर्ण भाषाभाषिका कलाकारहरुलाई प्रतिस्पर्धा भन्दा पनि सामुहिक मञ्च प्रदान गरेर आत्मियता भाईचारा र एकताको सदेश प्रवाह गर्ने उद्देश्य लिएको आयोजक पिम नेपालका अध्यक्ष माधव राज खरेलले जानकारी दिए । नेपाली सहित अन्य ७ वटा भाषा र भाका सहितका कुल ४० विधामा ५३ जनालाई अवार्ड प्रदान गरिएको थियो ।

कार्यक्रममा चलचित्र विकास बोर्ड, साँफेबगर नगरपालिका, गोकर्णेश्वर नगरपालिका, ओम समाज डेन्टल हस्पिटल, टोखा नगरपालिका, केईसी ईन्जिनियरिङ कन्सल्टेन्सी धनगढी, राष्ट्रिय बाणिज्य बैंक, स्मार्ट सर्भिस ईन, आईआईफटी, सिटि सेन्टर फुर्डकोर्ड, एभेन्टोज लगायतले सहयोग गरेका थिए । निम अवार्डको काष्ठमण्डप टेलिभिजन, जि टिभि नेपाल, लगायत विभिन्न युटुव च्यानलहरुबाट तथा अनलाईनमार्फत प्रत्यक्ष प्रशारण गरिएको थियो ।

चर्चित संगीतकार सन्तोष श्रेष्ठको संयोजकत्वमा गठन भएको निर्णायक समितिमा सदस्यको रुपमा बरिष्ठ संगीतकार जुगल डंगोल, बरिष्ठ सञ्चारकर्मी तथा भिडियो निर्देशक विजयरत्न तुलाधर, वरिष्ठ सञ्चारकर्मी तुलसी गिरी “भावुक”, चर्चित संगीत संयोजक साहास शाक्य, चर्चित लोक गायक अमृत खाती, मोडल राज टाईगर, निर्देशक केशव राज भट्ट रहेका थिए भने जुरीहरुको ब्यवस्थापन अडियो तर्फ पिम नेपालका उपाध्यक्ष शंकर थापा “स्माईल” र भिडियोतर्फ निम अवार्डका ब्यवस्थापन प्रमुख सनम कठायतले गरेका थिए ।

कार्यक्रममा भाषाभाषि तर्फ सर्वोत्कृष्ट नेपालभाषा गीतकार, सुरजबीर बज्राचार्य: नक्कलीम्ह मयजु, सर्वोत्कृष्ट नेपाल भाषा संगीतकार, सानुबाबु महर्जन: मस्यु जित छुजुछुजु, सर्वोत्कृष्ट नेपाल भाषा गायन, राजकुमार मानन्धर: द: पिनि द्य: ब्यथिक्, सर्वोत्कृष्ट नेपाल भाषा मोडलिङ, सुदित श्रेष्ठ: कतांमरिया रुप छंगु, सर्वोत्कृष्ट नेपाल भाषा निर्देशन, दर्शनबीर शाक्य: नाप च्वने मदुसां बाट अवार्ड प्राप्त गर्दा सर्वोत्कृष्ट मैथली गीत, विरेन्द्र झा: मिथिला धाम, उत्कृष्ट तामाङ सेलो, सन्जोक योन्जन: मायामा नेल, सर्वोत्कृष्ट भाषाभाषी गीत, पुनित कुमार बंशल: जै जनम भौम (मारवाडी भाषा) ले अवार्ड प्राप्त गर्न सफल भएका थिए । त्यस्तै भाका तर्फ सर्वोत्कृष्ट काँठे गीत, सुजता के.सी: आलु तामाले र सर्वोत्कृष्ट डेउडा गीत, महेश कुमार औजी: ए ईजु गैग्यो परान बाट पाएका थिए ।

# विदेशी चलचित्रमा शत प्रतिशत भन्सार शुल्क लगाउने ट्रम्पको घोषणा

काठमाडौं । अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले विदेशमा उत्पादित चलचित्रमाथि शत प्रतिशत भन्सार महशुल लगाउने घोषणा गरेका छन् । सामाजिक सञ्जाल ट्रुथ सोसलमा पोस्ट गर्दै राष्ट्रपति ट्रम्पले यस्तो घोषणा गरेका हुन् । उनले अमेरिकी चलचित्र उद्योग ‘तीव्र मरण मरिरहेको’ टिप्पणी गरेका छन् । ‘हामी फेरि अमेरिकामा चलचित्र बनाउन चाहन्छौं ।’ उनले लेखेका छन् ।

उनले अरु मुलुकहरुले आफ्ना चलचित्र निर्माता र चलचित्र स्टुडियोलाई अमेरिकाबाट अन्त लैजान विभिन्न किसिमका प्रोत्साहन गरिरहेको समेत बताएका छन् । यसले गर्दा हलिउड र अमेरिकाका अरु धेरै ठाउँहरु ध्वस्त भएको उनको दाबी छ ।

योजनाबद्ध रुपमा अरु देशहरुले यस्तो गरिरहेकाले यसलाई उनले ‘राष्ट्रिय सुरक्षा खतरा’ को संज्ञा दिएका छन् । ‘अरु थप कुरासँगै यो सन्देश र प्रचार हो !’ उनले लेखेका छन् ।

यसै अनुसार आफूले विदेशमा उत्पादित चलचित्रमाथि शत प्रतिशत भन्सार महशुल लगाउने प्रक्रिया तत्काल थाल्न अमेरिकी वाणिज्य मन्त्रालय र अमेरिकी व्यापार प्रतिनिधिलाई निर्देशन दिएको पनि उनले ट्रुथ सोसलमार्फत् घोषणा गरेका छन् ।

ट्रम्पको घोषणासँगै अमेरिकी वाणिज्यमन्त्री होवार्ड लट्निकले सामाजिक सञ्जाल एक्समा पोस्ट गर्दै आफूले यस कार्यलाई अघि बढाउने जनाएका छन् । यस्ता फिल्ममाथि कसरी र कुन प्रक्रियामार्फत् भन्सार शुल्क लगाउने भन्ने ट्रम्प वा लट्निकले खुलाएका छैनन् ।

त्यसैगरी, सिनेमा हलमा देखाइने चलचित्रमा मात्रै वा डिजिटल प्लेटफर्ममा देखाइने चलचित्रमा पनि भन्सार शुल्क लाग्नेबारे अझै स्पष्ट छैन । त्यस्तै, भन्सार शुल्क लगाउँदा चलचित्रले बक्स अफिसमा कमाएको पैसाको आधारमा वा उत्पादन लागतका आधारमा कुन हिसाबमा लगाइने भन्ने पनि प्रष्ट भइसकेको छैन ।

यसअघि गत जनवरी महिनामा ट्रम्पले हलिउडका चर्चित सेलिब्रेटी जोन भोइट, मेल गिब्सन र सेल्भिस्टर स्टालोनलाई हलिउडलाई ‘अझ ठूलो, झन राम्रो र थप बलियो’ बनाउने पहल गर्ने जिम्मेवारी दिएका थिए ।

# भक्तपुरमा गायक दीप श्रेष्ठको एकल साँझ सम्पन्न

भक्तपुर । गत वैशाख २० गते शनिबार साँझ ६:३० बजे देखि करिब ९:४५ बजेसम्म भक्तपुरको सल्लाघारीमा वरिष्ठ गायक तथा संगीतकार दीप श्रेष्ठको आवाज गुञ्जियो । ५ दशक भन्दा बढि लामो समय देखि नेपाली सांगीतिक क्षेत्रमा आफ्नो अतुलनिय योगदान दिदै आएका गायक श्रेष्ठले पहिलो पटक सांस्कृतिक एवं ऐतिहासिक जिल्ला भक्तपुरमा आफ्नो कालजयी आवाजले गुन्जायमान गरेका थिए ।

भक्तपुर सांगीतिक समाज र भक्तपुर चेम्बर अफ कमर्सको संयुक्त आयोजनामा भएको सो कार्यक्रमलाई सूर्यविनायक नगरपालिकाले समन्वय गरेको हो । सो समारोहमा गायक श्रेष्ठले निरन्तर रुपमा २३ देखि २५ वटा गीत गाएका थिए । भक्तपुरमा आफ्नो सांगीतिक कार्यक्रम भएकाले उनले आफुले गाएका नेपाल भाषाको गीत चुलबुल चन्चला भने गाउन बिर्सेनन् ।

वरिष्ठ गायक दीप श्रेष्ठले कार्यक्रमको दौरानमा भने, “धेरै बर्ष धेरै खुशी लाग्यो ।” ट्र्याकमा गाएर, अझ कतिपय युवा कलाकारहरुले त दर्शकलाई झुक्याएर लिप्सिङ्ग मात्र गरेर पनि “मनोरञ्जन” दिने जमानामा दीप श्रेष्ठको यो उमेरमा लाइभ म्युजिकल प्रस्तुति आफैमा एउटा अद्भुत उदाहरण बनेको त थियो नै, श्रोताहरुको खुशी उत्साह र वान्स मोरको बुलन्दीले पनि उनको गायकीको स्तर कति उच्च थियो भन्ने प्रमाण पेश गर्न जरुरीनै भएन ।

कार्यक्रममा सयौं संगीत प्रेमी व्यक्तित्वहरुको उपस्थिति थियो । वरिष्ठ गीतकार राजेन्द्र थापा, सुवास चन्द्र ढुंगेल, वरिष्ठ संगीतकार दीपक जंगम, सूर्यविनायक नगरपालिकाका प्रमुख वासुदेव थापा, उपप्रमुख सरिता तिम्सिना भट्टराईलगायतका व्यक्तित्वहरुको उपस्थितिले सो समारोहको गरिमा बढेको हो ।

भक्तपुरमा पनि यस्तो ऐतिहासिक कार्यक्रम हुन सक्छ भन्ने आभास यस कार्यक्रमले गराएको पनि छ । भक्तपुर सांगीतिक समाजका अध्यक्ष अल्बर्ट बज्राचार्य र भक्तपुर चेम्बर अफ कमर्सका अध्यक्ष कविदास श्रेष्ठका अनुसार यो समारोहको सफलताले भक्तपुर जिल्लाले सांगीतिक कार्यक्रम यस्तो तरिकाको हुनुपर्छ भन्ने बेन्चमार्क बनाएको जनाकारी दिए । गायक श्रेष्ठले आफ्नो जीवनका लोकप्रिय गीतहरु म पत्थरको देवता होइन, कति कमजोर रहेछ भाग्य, म त दूर देखि आए, बितेका कुराले, झिरमा उनिनु लगायतका गीतहरु प्रत्यक्ष प्रस्तुत गरी दर्शकलाई भरपुर मनोरन्जन दिएका थिए।

# सिक्वड गेम- ३ : प्लेयर ४५६ र फ्रन्टम्यान बीच अन्तिम लडाई

काठमाडौं । नेटफ्लिक्सको लोकप्रिय वेब-सिरिज ‘स्क्विड गेम’को तेस्रो सिजनको टिजर रिलिज भएको छ। यो टिजरले प्रशंसकमाझ उत्साह र सस्पेन्स दुवै बढाएको छ।

टिजरले खतरनाक खेल फेरि एक पटक सुरु हुन लागेको देखाउँछ, जसमा सहभागीले आफ्नो ज्यान जोखिममा पार्छन । पराना पात्रहरूसँगै केही नयाँ अनुहार पनि देख्न सकिन्छ । टिजरले धेरै कुरा खुलाएको त छैन तर दृश्य एकदमै डरलाग्दो र रोचक देखिएको छ ।

तेस्रो श्रृंखलालाई ‘सिक्वड गेम’को अन्तिम भाग भनिएकाले पनि दर्शकमाझ नयाँ सिजन बहुप्रतीक्षित छ । तेस्रो सिजनको केन्द्रमा प्लेयर ४५६ र फ्रन्टम्यानको लडाइ केन्द्रित छ। तपाईंले अघिल्ला दुवै सिजन हेर्नुभएको छ भने, तेस्रो पनि प्रतीक्षित हुनसक्छ ।

सेओङ गि-हुन/प्लेयर ४५६ (ली जंग-जे) को विद्रोह असफल भएपछि, उनको सबैभन्दा मिल्ने साथी जंग-बे (ली सियो-ह्वान)को मृत्यु द फ्रन्ट म्यान (ली ब्युङ-हुन) को हातबाट हुन्छ । फ्रन्टम्यान यो खेलमा नक्कली खेलाडीको रुपमा देखिएका थिए । विद्रोह असफल भएपछि प्लेयर ४५६ कब्जामा पर्छन् । यही दृश्यबाट सिजन २ सकिएको थियो ।

डिसेम्बरमा विश्वव्यापी रूपमा रिलिज भएपछि, सिजन २ एक हप्तामा नेटफ्लिक्सको सबैभन्दा धेरै हेरिएको श्रृंखला बन्यो। अहिले सिजन १ र ‘वेनस्डे’पछि नेटफ्लिक्समा तेस्रो धेरै हेरिएको श्रृंखला बनेको छ ।

मुख्य कलाकारहरूका अतिरिक्त, फर्केका कलाकारहरूमा यिम सि-वान, पार्क सुङ-हुन, जो यु-री, पार्क ग्यु-यङ र वाइ हा-जुन समावेश छन्, जो विद्रोहबाट बचेका थिए । सिजन ३ आगामी जुन २७ देखि नेटफ्लिक्समा रिलिज हुँदैछ। यो श्रृंखला नेपालमा पनि धेरै हेरिनेमध्ये पर्छ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स
साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ३७ ने.सं. ११४५ बछलागा द्वितीया बैशाख ३१ गते बुधबार, २०८२ 14 May 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

# आम नागरिकमा बढ्दै सरकार प्रति अविश्वास !



काठमाडौं । संसदमा पहिलो र दास्रो स्थानमा रहेको राजनीतिक दल नेपाली कांग्रेस र नेकपा एमालेको ७ बुँदे सहमतिपछि केपी शर्मा ओलीको नेतृत्वमा सरकार बनेको धेरै समय गुज्रिसकेको छ । यस अवधिमा कांग्रेस र एमालेले सरकारले देखिने गरी र देशमा सुशासन कायम गर्ने प्रतिबद्धताका साथ सरकार बनाएको र अब आउने २०८३ सालको मंसिरमा सरकारको नेतृत्व नेका सभापति देउवालाई हस्तान्तरण गर्ने प्रतिबद्धता जनाउदै आइरहेको छ। तर यस अवधिमा नेपाली कांग्रेसकै देउवा वाहेकका काग्रेसका नेताहरु पनि सरकारको काम कारवाहीलाई लिएर असन्तुष्ट रहेको सरकारका काम कारवाहीलाई लिएर आलोचना गरिरहेका छन्। यसका साथै आम जनसमुदायमा समेत सरकार विरोधी मत बढ्दै गएको छ । यहाँ कारण पनि विगतमा निरकुंश राजतन्त्रका हिमायतिहरु र स्वयं पूर्व राजा ज्ञानेन्द्रसमेत पुनः आम जनताको समर्थन लिएर नेपालमा राजतन्त्र पुनः स्थापना गर्न सकिन्छ कि भन्ने लालसाका साथ बर्तमान राजनीतिक दलका क्रियाकलाप र देशमा बढ्दै गइरहेको आम जनताको बर्तमान लोकतान्त्रिक भनिएको व्यवस्था प्रतिको वितृष्णालाई आफ्नो पक्षमा उपयोग गर्ने रणनीतिमा लागेको छ । तर सभापति शेरबहादुर देउवा अहिलेकै सत्ता समीकरण ठीक रहेको सन्देश दिइरहेका छन् । सभापति देउवाका लागि आउने दिनमा एकपटक प्रधानमन्त्री बनेर सरकारको नेतृत्व गर्ने मौका छ । जसलाई देउवाको मौनताले पनि सरकारको तेतृत्व गर्ने अवसर गुमाउने पक्षमा छैन । किनकी बर्तमान गठजोड सरकारको सरकार पक्षमा नै रहेको नेका कै नेताहरुबाट आलोचना हुने गरेको छ भने नेकपा एमालेका तल्ला स्तरका नेताहरु पनि सरकारको काम कारबाहीबाट असन्तुष्ट रहेको एमालेकै कार्यक्रमहरुमा देखिने गरको छ । तर नेकपा एमालेले एमाले रनेर्तत्वको विरोध गरेकै आधारमा जिम्मेवार पदमा रहेका एमालेका नेताहरुलाई पार्टीबाट निष्काशन गर्ने देखि पार्टी सदस्यबाटै निलम्बन गर्ने गरेको तथ्यबाट पनि एमालेका नेता कार्यकर्ताहरु खुलेर नेतृत्व र पार्टीको आलोचना गर्न डराइरहेको अवस्था छ । यही डरलाई कायम राख्दै नेतृत्व तह आफै सर्वेसर्वा भएको दम्भमा शासन गरिरहेको अवस्था छ ।

यता एमालेको यही रवैयाका कारण कांग्रेसका महामन्त्रीद्वय गगन थापा र विश्वप्रकाश शर्मादेखि नेता डा. शेखर कोइरालासम्मले सरकारको विरोध गर्दै देउवासामु दबाब बढाएका हुन् । यस्तो दबाब बढाउनेमा संस्थापन इतर पक्षमात्रै छैन, देउवाका विश्वासिला नेता समेत छन् । उनकै टीमका प्रवक्ता डा. प्रकाशशरण महतले समेत सरकारको कामलाई लिएर हरेक दिन निराशा र विरोध व्यक्त गरिरहेका छन् । किनकी नेताहरुलाई सरकारको विरोध गरेकोमा र नेतृत्वको आलोचना गरेको कारणले नै बर्तमान एमाले नेतृत्व इमान्दार नरहेको आशंका गरेका छन्। साथै एमाले अध्यक्ष केपी ओली जब जब कांग्रेसबाट विरोधको आवाज बढ्दै जान्छ, तव आलीको बोली

बाँकी पेज ७ मा

# बुद्ध जयन्तीकै दिन फरक रुपमा मनाइने चण्डेश्वरीको जात्रा



भक्तपुर। देशैभर बुद्ध जयन्ती धुमधामले मनाउँदै गर्दा भक्तपुरमा भने चण्डेश्वरीको जात्रा मनाइने गरिन्छ । भक्तपुरको चासुखेलमा भव्य रुपमा चण्डेश्वरीको जात्रा सम्पन्न भएको छ । प्रत्येक वर्ष वुद्ध जयन्तीकै दिन अर्गात् बैशाख शुक्ल पूर्णिमाको दिन भक्तपुर नगरको टिबुक्छें चासुखेलस्थित चण्डेश्वरी मन्दिर अगाडि यो जात्रा हुने परम्परा छ ।

बैशाख शुक्ल पुर्णिमा र त्यसको अघिल्लो दिन गरी दुईदिन यहाँ धुमधामसँग जात्रा मनाइन्छ। त्यसअनुसार आइतबार रातिदेखि

बाँकी पेज ७ मा

# सामाजिक सञ्जालमा फैलिएको जुजु धौ बारेको अफवाहको विभागद्वारा खण्डन



भक्तपुर । सोमबार दिउँसोदेखि एउटा समाचारले भक्तपुर हल्लियो । त्यो समाचार थियो दहीको । दहीमा अखाद्य पदार्थ नमिसिएको समाचारले सामाजिक सञ्चारमा भाइरल नै बन्यो । खाद्य प्रविधि तथा गुण नियन्त्रण विभागले भक्तपुरको विभिन्न स्थानमा उत्पादन हुने दहीमा कुनै प्रकारको अखाद्य नमिसेको विज्ञप्तिमार्फत् स्पष्ट पारेको थियो । यो सार्वजनिक भएसँगै यो समाचारले व्यापकता पाएको थियो । साथै यो विज्ञप्तिमा भित्रपटी मिति विग्रेको विषयमा पनि चर्चा भयो। २०८२ हुनुपर्नेमा २०८१ थियो । खाद्य

बाँकी पेज ७ मा

# मध्यपुर थिमिमा जेसुमको मौलिक संस्कृतिको प्रवर्द्धन यात्रा



भक्तपुर । स्थानीय कला, संस्कृति र सम्पदालाई सिर्जनात्मक अभिव्यक्तिमार्फत उजागर गर्दै समाजमा सकारात्मक धारणा फैलाउने उद्देश्यले सुरु गरिएको 'जेसुम यात्रा' अभियानको पछिल्लो श्रृंखला भक्तपुरको ऐतिहासिक नगर मध्यपुर थिमिमा सम्पन्न भएको छ। सात वर्षअघि स्वतन्त्र स्रष्टाहरूको समूहले सुरु गरेको यो अभियान चित्र, साहित्य र अभिनयमार्फत नेपालमा रहेको मौलिक संस्कृतिको प्रवर्द्धन गर्दै अगाडि बढिरहेको छ।

गत सोमबार साहित्यकार, पत्रकार, चित्रकार र संस्कृतिप्रेमीहरूको टोलीले बैशाख २९ गते बिहान ८ बजे थिमिमा रहेका प्रमुख सम्पदाहरुको अवलोकन गरे । उनीहरूले मल्कालीन बालकुमारी मन्दिर, लोकेश्वर, लायकु, निगूपुखू, दिगु भैरव, सिद्धिकाली, चपाचो, नगदेशको सुनको तिकीभ्याः, सिद्धिगणेश, बोडेको पलेस्वाँ पुखू, पाँचो गणेशलगायतका सम्पदास्थल पुगेर इतिहास र संस्कृतिको अवलोकन गरे ।

थिमिका निवर्तमान नगरप्रमुख मदनसुन्दर श्रेष्ठले थिमिमा रहेका सम्पदाको इतिहास, जात्राको परम्परा र संस्कृतिको महत्त्वबारे स्रष्टाहरुलाई जानकारी दिँदै पथप्रदर्शकको

बाँकी पेज ७ मा

# नेवाःहरुको प्रविधि र शिल्प ज्ञानबारे अभिलेखीकरण शुरु



काठमाडौं। नेवाः समुदायमा सयौं वर्षदेखि प्रचलनमा रहेको र कतिपय हराउँदै जान थालेको ज्ञान, सीप र प्रविधिको अभिलेखीकरण गर्ने कार्य शुरु गरिएको छ । नेपालभाषा एकाडेमीको पहलमा सो कार्यको शुरुआत गरिएको हो।

विभिन्न क्षेत्रमा कार्यरत प्राज्ञ, विषयविज्ञमार्फत नेवाः समुदायमा प्रचलित कृषि, काष्ठकला र शहरी विकास सम्बन्धी ज्ञान, प्रविधि र सीपको अभिलेख गर्ने कार्यको शुरुआत गरिएको हो । यही कार्यअन्तर्गत शनिबार राजधानीस्थित राष्ट्रिय सभागृहमा नेवाः प्रविधि र शिल्प ज्ञानबारे पहिलो राष्ट्रिय गोष्ठी आयोजना गरिएको थियो । आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान र काठमाडौं महानगरपालिकाको सहकार्यमा सो कार्य सम्पन्न गरिएको थियो।

गोष्ठीमा शहरी योजनाविद पद्मसुन्दर जोशीले विश्वमा

बाँकी पेज ७ मा

# तीनै तहका सरकारलाई प्रेस सेन्टरको ज्ञापनपत्र

काठमाडौं । प्रेस सेन्टर नेपालले बैशाख २८ गते आइतबार एकैपटक सङ्घीय, प्रदेश र स्थानीय सरकारलाई १५ बुँदे ज्ञापनपत्र बुझाएको छ । पत्रकारको हत्यारामाथि कारबाही, पूर्ण प्रेस स्वतन्त्रताको रक्षा, पत्रकारको भौतिक तथा पेशागत सुरक्षालगायतका मुद्दा समेटिएको सो ज्ञापनपत्र देशभरका सरकार र सम्बन्धित निकायहरूलाई बुझाइएको हो ।

केन्द्रीय समिति अध्यक्ष कमल गिरीको नेतृत्वमा सञ्चार तथा सूचना प्रविधिमन्त्री पृथ्वी सुब्बा गुरुङ तथा मन्त्रालयकी सचिव राधिका अर्याललाई सिंहदरबारस्थित मन्त्रालयमा ज्ञापनपत्र बुझाइएको थियो । सो अवसरमा काठमाडौं घोषणापत्र-२०८१ समेत सरकारलाई हस्तान्तरण गरिएको महासचिव मनोज घर्तीले जनाएका छन् ।

ज्ञापनपत्रमा राजनीतिक आस्थाका आधारमा सञ्चारकर्मी हटाउने कार्य रोक्नुपर्ने, सहिद तथा बेपत्ता पत्रकारका नाममा कोष र पुरस्कार स्थापना गर्नुपर्ने, घाइते पत्रकारको निःशुल्क उपचार तथा सरकारी अस्पतालमा ५० प्रतिशत छुटको व्यवस्था गर्नुपर्ने लगायतका मागहरू राखिएका छन् ।

ज्ञापन पत्र बुझ्दै मन्त्री गुरुङले प्रेस स्वतन्त्रता संविधानले प्रत्याभूत गरेको अधिकार भएको भन्दै सरकार यसको संरक्षणमा प्रतिबद्ध रहेको बताए । त्यस्तै सचिव अर्यालले सबै पत्रकारप्रति समान व्यवहार गरिने स्पष्ट पारिन् ।

प्रदेश तहमा पनि सबै सातवटै प्रदेश समितिहरूले आ-आफ्ना सरकारसमक्ष ज्ञापनपत्र बुझाएका छन् ।

मधेस र कर्णाली प्रदेशमा मुख्यमन्त्री समक्ष र अन्य प्रदेशहरूमा आन्तरिक मामिला तथा कानुन मन्त्रालयमा पत्र बुझाइएको महासचिव मनोज घर्तीले जानकारी गराए । त्यहाँ प्रेसमैत्री कानुन, विज्ञापनको समानुपातिक वितरण र सञ्चार संस्थाको दिगोपनाको माग गरिएको छ ।

६५ भन्दा बढी जिल्लामा जिल्ला समितिले प्रमुख जिल्ला अधिकारीमार्फत ज्ञापनपत्र बुझाएका छन् । काठमाडौ जिल्ला समितिका अध्यक्ष राममणी घिमिरेले सो अवसरमा आफूहरूले जिल्लामा पत्रकारले भोग्नुपरेको समस्या समाधानतर्फ पनि प्रमुख जिल्ला अधिकारीलाई ध्यानाकर्षण गराएको बताए । त्यस्तै, स्थानीय सरकारलाई पनि जिल्ला तथा पालिका समितिहरूले प्रत्यक्ष, इमेल र हुलाकमार्फत ज्ञापनपत्र बुझाएका बताइएको छ ।

प्रेस सेन्टर नेपालको पाँचौं राष्ट्रिय महाधिवेशनबाट निर्वाचित केन्द्रीय समितिको वैशाख १३ गतेको बैठकको निर्णयबमोजिम यो ज्ञापनपत्र बुझाउने अभियान सञ्चालन गरिएको प्रेस सेन्टर नेपालका अध्यक्ष कमल गिरीले जानकारी गराए । आफ्ना मागहरु सम्बोधन गर्न सरकारलाई ध्यानाकर्षण गराउँदै अध्यक्ष गिरीले प्रेसलाई अवमूल्यन गरेर वर्तमान व्यवस्था बलियो बन्न नसक्ने बताए ।

# नेपालभाषाको पत्रकारिता यात्रा १ सय १ वष पुरा



काठमाडौं । नेपालभाषाको पत्रकारिता शुरुआत भएको १ सय १ वर्ष पुगेको छ । ललितपुर महानगरपालिका-९ स्थित सप्तपुर महाविहारमा जन्मिनुभएका धर्मादित्य धर्माचार्य (जगतमान वैद्यं) ले ने.सं १०४५ अर्थात् १९८२ सालमा बुद्धजयन्तीकै दिन भारतको कलकत्ताबाट बुद्धधर्म नामक नेपाल भाषाको पत्रिका प्रकाशन गर्नुभएको थियो । सो पत्रिका नेपाल भाषाका पहिलो पत्रिका रहेको छ । त्यतिबेला नेपालका प्रधानमन्त्री श्री ३ चन्द्रशम्शेर थिए । बुद्धधर्मको नाउँबाट दुई अंक, बुद्ध धर्म नेपालभाषाको नाउँमा एक अंक र बुद्ध धर्म र नेपालभाषाको नाउँमा सात वटा अंक गरी १० वटा अंक प्रकाशन भएपछि प्रकाशनले निरन्तरता पाउन सकेन । यद्यपि नेपालभाषाको पत्रकारिताको शुरुआत गरिदिएको अध्येयता नरेशवीर शाक्यले बताए ।

समाजसुधार, भाषासेवी र बुद्धधर्मको जागरणका लागि जगमान वैद्यले नेपालभाषाको माध्यमबाट पत्रिका प्रकाशन गरेर जुन योगदान दिनुभएको छ, त्यो देन सदैव स्मरणीय रहेको पनि शाक्यको भनाई रहेको छ । राणाहरुले नेपालभाषामा पत्रिका प्रकाशन गर्न नदिएपछि जगतमान वैद्यले भारतको कलकत्ताबाट पत्रिका प्रकाशन गर्नुभएको थियो । त्यति बेला भारत बेलायत साम्राज्य अन्तर्गत थियो । त्यतिबेला उहाँले नेपालभाषाबाट अरुलाई लेख्न लगाउन पत्रिका प्रकाशन गर्नुभएको थियो । भाषाआयोगका सदस्य सुरेशकिरण मानन्धरले भने ।

त्यस पत्रिकाले नेपालभाषा, बुद्धधर्म, राजनीतिक ,सामाजिक चेत र साहित्यको उत्थानमा ठूलो टेवा पुऱ्याएको उल्लेख गर्दै त्यसले समाजका विविध क्षेत्रको हितका लागि पत्रकारिताको भूमिका स्थापित गराइदिएको पनि मानन्धरको भनाई रहेको छ । 'भाषा, साहित्य, धर्म र सामाजिक जागरणका लागि पत्रकारिता भूमिका महत्वपूर्ण स्थापित गर्नुहुने धर्माचार्यको योगदानबाट प्रेरणा लिएर आजका पत्रकारहरु अघि बढ्नुपर्ने खाँचो रहेको उनले बताए ।

धर्माचार्यको जन्मजयन्ती, नेपालभाषाको पत्रकारिता शुरुआत भएको अवसर पारेर १० वर्षअघि मातृभाषा पत्रकारिता दिवस मनाउँदै आएको छ । नेवाः पत्रकार राष्ट्रिय दबूले नेपाल आदिवासी जनजाति पत्रकार महासंघ( फोनिज) संग सहकार्य गरेर सो दिवस मनाउन थालेको हो । यस अवसरमा नेवाः पत्रकार राष्ट्रिय दबू ललितपुर शाखाले आईतबार ललितपुर महानगरपालिका- ३ पुल्चोक स्थित धमाचार्यको प्रतिभामा माल्यार्पण कार्यक्रम आयोजना गरिएको थियो । सो कार्यमा उहाँले पत्रकारितासंगै नेपालभाषाको उत्थान, भाषा साहित्यको विकास र सामाजिक राजनीतिक चेतका लागि पुऱ्याउनुभएको योगदानको स्मरण गनुभएको थियो । सो कार्यमा ललितपुर महानगरपालिका मेयर चिरिबाबु महर्जन, जिल्ला प्रहरी परिसर ललितपुरका प्रमुख एवं प्रहरी वरिष्ठ उपरीक्षक श्यामकृष्ण अधिकारी ,पत्रकार दबूका केन्द्रीय अध्यक्ष नृपेन्द्रलाल श्रेष्ठ, ललितपुर महानगरपालिका - ९ का वडाअध्यक्ष राजु महर्जन, १६ का वडाअध्यक्ष निर्मलरत्न शाक्य सहितसञ्चारकर्मी, साहित्यकार, भाषिक अधिकारकर्मी र समाजका विविध क्षेत्रमा क्रियाशील महानुभावहरुको उपस्थिति रहेको थियो ।

माल्यार्पणपछि भएको ऱ्याली नगरका विविध भागमा परिक्रममा गरी बुबहालमा सभामा परिणत भएको थियो । सभाको उद्घाटन ललितपुर क्षेत्र नं २ का संघीय सांसद् प्रेमबहादुर महर्जनले गरेको थियो । सो अवसरमा पत्रकार, लेखक, तथा अनुसन्धानकर्ता वसन्त महर्जनलाई यस वर्षको धर्मादित्य धर्माचार्य पत्रकारिता पुरस्कार प्रदान गरिएको थियो । पुरस्कारको नगद राशि १० हजार रुपैयाँ रहेको छ । समाजसेवी तथा व्यवसायी स्वर्गीय रमेश महर्जनले स्थापना गर्नुभएको सो पुरस्कार १० वर्षदेखि हरेक वर्ष दिदै आएको छ । सोही समारोहमा स्वर्गीय महर्जनका श्रीमती सरिता महर्जनले पुरस्कारका लागि अक्षयकोष खडा गर्न ५ लाख रुपैयाँको चेक हस्तान्तरण गर्नुभएको थियो । सभाका वक्ताहरुले मातृभाषाको पत्रकारिता र पत्रकारितालाई समावेशी हुनुपर्ने सन्दर्भमा केन्द्रीत गर्दै आआफ्नो धारणा राखेको थियो ।



# प्रजापति कम्प्लेक्समा सोनाम गेयसको शोरुम शुभारम्भ




भक्तपुर । "स्वदेशी बस्तुको प्रयोग गरौ, नेपाली उद्योगलाई प्रोत्साहन गरौं" भन्ने नारालाई सार्थक बनाउन र सानोम ब्राण्डका सामानहरू एकैस्थानबाट प्राप्त गर्न सकोस् भन्ने हेतुले भक्तपुरको मध्यपुर थिमिस्थित राद्ये राद्ये नजिकै प्रजापति कम्प्लेक्समा सोनाम गेयर्स प्रा.लि. सञ्चालनमा आएको छ ।

आईएसओ प्रमाणपत्र प्राप्त सोनाम ब्राण्डले स्वदेशी गुणस्तरीय सामानको उत्पादन गर्दै वजार प्रवर्धन गरिरहेको छ । प्रा.लि.ले बैशाख २९ गतेबाट सञ्चालनमा आएको उक्त पसलमा समयसापेक्ष गुणस्तरीय लुगाहरु, ज्याकेट, ट्रेकिङ जुत्ता, ब्याग, पञ्जालगायतका सामानहरू राखिएको छ ।

पसलको उद्घाटन मध्यपुर थिमि नगरपालिकाका नगरप्रमुख सुरेन्द्र श्रेष्ठले गरेको कार्यक्रममा उनले वर्तमानमा गुणस्तरिय तथा ब्राण्डेट सामानहरूको बजारीकरणमा सोनाम ब्राण्ड पनि एक भएको बताउँदै ब्राण्डेड सामान खरिद गर्नेहरूको लागि यो पसल रोजाईमा पर्ने बिश्वास व्यक्त गरे ।

बिदेशी वस्तुहरूसंग प्रतिस्पर्धा गर्दै आईरहेको सोनाम ब्राण्डका उत्पादनले बजारमा आफ्नो छुट्टै पहिचान बनाउन सफल भएको भन्दै सोनाम गेयर्स प्रालि थिमिका प्रमुख राजेन्द्रबिक्रम प्रजापतिले हाल सोनाम कम्पनीले मुलुकभरी विभिन्न २८ स्थानहरूमा ५ सय भन्दा बढीलाई प्रत्यक्ष रोजगारी दिएको जानकारी दिए ।

# भाषा दिवसको अवसर पारेर दिप प्रज्वलन

भक्तपुर । बागमति प्रदेश सरकारले प्रदेशका सबै सरकारी निकायमा खससहित नेपाल भाषा र तामाङ्ग भाषालाई सरकारी कामकाजी भाषाको रुपमा लागू गर्ने धोषणा गरेको दिनलाई भाषा दिवसको रुपमा मनाउन थालिएको हो । यसबर्ष पनि बैशाख २४ गते बागमति प्रदेशमा बिदा दिने धोषणा गरी राजपत्रमा समेत प्रकाशित गरिसकेको छ ।

सो अवसरमा नेवाः देय् दबू ख्वप नगर समिति, नेपाल तामाङ घेदुङ्ग जिल्ला समिति भक्तपुरको आयोजनामा बुधबार भक्तपुर नगरपालिका वडा नं ९ दतात्रयस्थित दिप प्रज्ज्वलन तथा शुभकामना आदानप्रदान कार्यक्रम सम्पन्न भयो । कार्यक्रममा नेपाल तामाङ घेदुङ्ग जिल्ला अध्यक्ष कान्छा तामाङले विगतमा सरकारी कार्यालयमा नेपाली भाषा बाहेक अन्य भाषा बोल्न पाइन्न नेपाल भाषा र तामाङ भाषा प्रयोग गर्दा अपमानित हुनुपर्ने र आफ्नो भाषालाई दबाइरहेको अब बागमती प्रदेश सरकारले नेपाल भाषा र तामाङ भाषाबाट लेख्न बोल्न पाउने अधिकार कानुनले प्रदान गरिएको छ ।

त्यस्तै नेवाःदेय् दबू ख्वप जिल्ला समितिका अध्यक्ष नरेश सुवालले भाषा नभए जाती रहन्दैन, त्यसैले बागमती प्रदेश सरकारले नेपालभाषालाई बागमती प्रदेशमा नेपालभाषाबाट सरकारी कार्यलयमा निवेदन तथा आफ्नो कुरा प्रष्ट राख्न सकिनेछ । यदि कामकाज गर्न सरकारी कार्यालयमा नेपालभाषाको अनुवाद गर्न कर्मचारीको व्यवस्था गर्न बागमती प्रदेश सरकारले व्यवस्थापन गर्न अध्यक्षले सरकार समक्ष आग्रह गनु भयो।

कार्यक्रममा नेवाःदेय् दबू ख्वप नगर समितिका उपाध्यक्ष राम चन्द्र प्रजापतिले बागमती प्रदेश सरकारले सविधानले दिएको अधिकार प्रयोग गरि बागमती प्रदेशको स्थानिय तह लगाएत विभिन्न सरकारी कार्यालयमा नेपालभाषा र तामाङ भाषालाई कामकाजको लागि प्रयोग गर्न कानुनले दिएको अधिकारलाई तपाई हामी सबैले व्यवहारमा प्रयोग गर्नु हुन अनुरोध गर्नु भयो तपाई हामीले प्राप्त भएको अधिकार यदि प्रयोग गरेन्न भने त्यो प्राप्त भएको अधिकार सरकारले वेवास्ता नगर्लान्न भन्न सकिन्न। त्यसैले भक्तपुर नगरपालिका भित्र बसोबास गर्ने ९८ प्रतिशत नेपालभाषा बोल्ने नेवा जाती रहेको छ जहाँ नेपालभाषा प्रयोग गर्न स्थानिय सरकारले नेपालभाषा मै पढ्न पाठयक्रम बनाउनु पर्ने बताउनु भयो।नेपालभाषा अनुवादक राखी रोजगारको अवसर प्रदान गर्न सकिने बताउनु भयो। नेवाः मिसा दबू ख्वप जिल्ला सदस्य सरस्वती प्रजापति नेवाःदेय् दबू ख्वप नगर अध्यक्ष लागाएतले भाषा दिवसको अवसरमा शुभकामना दिनु भयो।

# माओवादी केन्द्रको मध्यपुर थिमि नगरसमितिको अध्यक्षमा पुनः उपमेयर बिजय



भक्तपुर । नेकपा (माओवादी केन्द्र) मध्यपुर थिमिको दोश्रो नगर सम्मेलनबाट ५५ सदस्यीय नगर समिति निर्वाचित भएको छ । सम्मेलनबाट यस अघि नगर अध्यक्ष रहेका विजयकृष्ण श्रेष्ठ निविरोध निर्वाचित भएका छन् ।

अध्यक्षमा निर्वाचित श्रेष्ठ मध्यपुर थिमि नगरपालिकाको नगर उपप्रमुख पनि हुन् । पार्टीको नगर अध्यक्षमा उनको यो दोश्रो कार्यकाल हो । बिहीबार बिहान थिमि बैंक्वेटमा सम्पन्न दोश्रो सम्मेलनको बन्द सत्रबाट बिजयकृष्णको नेतृत्वमा सिङ्गो कार्यसमिति नै निर्विरोध निर्वाचित भएको संविधान सभा सदस्यसमेत रहेका निर्वाचन समितिका संयोजक सत्यलाल मूलले जानकारी दिए ।

उनका अनुसार उपाध्यक्षमा बिकेश श्रेष्ठ, जगतमाया प्रजापति र नरेश रन्जित निर्वाचित भएका छन् । त्यस्तै सचिवमा अधिवक्ता शिव सुन्दर श्रेष्ठ, सहसचिवमा कृष्णमान प्रजापति र कोषाध्यक्षमा रत्न केशरी प्रजापति निर्वाचित भएकी छन् ।

निर्विरोध निर्वाचित ५५ सदस्यीय कार्यसमितिलाई नगर इन्चार्ज एवं माओवादी केन्द्रकी केन्द्रीय सदस्य प्रतिमा श्रेष्ठले सपथग्रहण गराएकी थिइन् । अध्यक्ष मण्डलका अध्यक्ष एवं माओवादी केन्द्रका केन्द्रीय सल्लाहकार शिवहरी खनालको अध्यक्षतामा बन्द सत्र सम्पन्न भएको थियो ।

सम्मेलनको उद्घाटन माओवादी केन्द्रका केन्द्रीय सदस्य एवं भक्तपुर जिल्ला इन्चार्ज दिलिप प्रजापतिले गरेको थियो । उद्घाटन सत्रलाई सम्बोधन गर्दै उनले प्रत्येक वडामा जनउभार आएको उल्लेख गर्दै आउने स्थानीय तहको निर्वाचनमा जित्ने गरि अघि बढ्नुपर्नेमा जोड दिए ।

त्यस्तै अर्का केन्द्रीय सदस्य एवं बागमती प्रदेश स्कूलिङ बिभाग सह इन्चार्ज डीपी ढकालले पार्टी संसदीय अभ्यासमा रहेकोले चुनाव जित्नु नै मुख्यकुरा भएको भन्दै जनताको सेवागर्ने शासन सत्ता स्थापनाको लागि माओवादी केन्द्र चुनाव केन्द्रीत हुनुको बिकल्प नभएको बताए । बागमती प्रदेश सभा सदस्य समेत रहेका केन्द्रीय सदस्य देवेन्द्र श्रेष्ठले जनप्रतिनिधि र जनतालाई जोड्ने काम नेताकार्यकर्ताले गर्नुपर्ने धारणा व्यक्त गरे ।

वाइसीएल इन्चार्ज समेत रहेका अर्का केन्द्रीय सदस्य रामप्रसाद सापकोटा दीपशिखाले अरु दिन माओवादी चाहिने र भोट हाल्ने दिन चाहिँ बिर्सने जनतालाई कसरी पार्टी प्रति प्रतिवद्ध बनाउने भन्ने जिम्मेवारी स्थानीय नेताकार्यकर्ताको काधमा रहेको बताउँदै आगामी दिनमा सोही अनुरुप जनता माझ आफूलाई प्रस्तुत गर्न आग्रह गरे ।

कार्यक्रममा जिल्ला संयोजक सुनिल बासुले मध्यपुर थिमि नगरपालिकामा पार्टीको नगर अध्यक्ष नै उपप्रमुख रहेकाले पार्टी र जनताले मध्यपुरलाई नियालिरहेको उल्लेख गर्दै उदाहरणीय र जनप्रिय काम गर्नपर्नेमा जोड दिए । सो अवसरमा केन्द्रीय सदस्य एवं तत्कालीन संविधान सभा सदस्य उमा कपाली, प्रदेश सभा सदस्यसमेत रहेकी पार्टीको प्रदेश सचिवालय सदस्य भुवनकेशरी श्रेष्ठ, प्रदेश समिति सदस्य बालकृष्ण दुगुलगायतको आतिथ्यता रहेको थियो ।

त्यस्तै नेकपा (माओवादी केन्द्र) को अघिल्लो दिन अर्थात बेशाख २४ गते भएको तेस्रो भक्तपुर नगर सम्मेलनले अध्यक्षमा राकेश सुवाललाई दोहोऱ्याएको छ । सो नगर सम्मेलनबट ३९ सदस्यीय नयाँ कार्यसमिति निर्वाचित गरेको हो ।

नयाँ कार्यसमितिको उपाध्यक्षमा तत्कालीन अन्तरिम संसदमा सांसद समेत रहेकी नारायण देवी श्रेष्ठ निर्वाचित भएकी छन् भने अन्य उपाध्यक्षहरुमा नारायण सुन्दर त्वयना र बिकास लाखे निर्वाचित भएको जनाएका छ । त्यस्तै सचिवमा बिक्रम ह्यङ्गो र सहसचिवमा श्रीकृष्ण कुम्पाख निश्चल निर्वाचित भएका छन् । पदाधिकारीमा अध्यक्ष सुवालसंगै उपाध्यक्ष त्वयना र सचिव ह्यङ्गो दोहोरिएका छन् ।

सबै पदमा सर्वसम्मत भएको र कोषाध्यक्ष पद भने नयाँ कार्यसमितिको पहिलो बैठकले टुंगो लगाउने माओवादी केन्द्रकी केन्द्रीय सदस्य एवं भक्तपुर नगर इन्चार्ज उमा कपालीले बताएकी छन् । तत्कालीन संविधान सभा सदस्य समेत रहेकी नगर इन्चार्ज कपालीले नयाँ कार्यसमितिलाई सपथ ग्रहण समेत गराएकी छन् ।

यस अघि नेकपा माओवादी केन्द्रले भक्तपुर जिल्लाका मध्यपुर थिमि नगरपालिका र भक्तपुर नगरपालिकाका सबै वडाहरुमा वडा सम्मेलनबाट नयाँ नेतृत्व चयन गरिसकेको जवनाएको छ ।

# भारतलाई पाकिस्तानको जवाफ– फेरि अर्को कुनै गल्ती नहोस्

एजेन्सी । भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीद्वारा सोमबार राष्ट्रलाई गरेको सम्बोधनबारे पाकिस्तानले कडा प्रतिक्रिया जनाएको छ । पाकिस्तानविरुद्ध गरिएको 'अपरेसन सिन्दूर' को चर्चासहितका मोदीका कडा सन्देशहरूलाई पाकिस्तानले भडकाऊ र भ्रामक भन्दै आलोचना गरेको छ ।

पाकिस्तानको विदेश मन्त्रालयले एक प्रेस विज्ञप्ति जारी गर्दै मोदीको उक्त भनाइको कडा शब्दामा निन्दा गरेको हो । 'जब क्षेत्रीय शान्ति र स्थायित्वका लागि अन्तर्राष्ट्रिय प्रयास जारी छ, त्यस्तो समयमा भारतको यो बयान खतरनाक हो', पाकिस्तानले भनेको छ, 'जुन गलत सूचना, राजनीतिक स्वार्थ र अन्तर्राष्ट्रिय कानुनलाई उपेक्षा गर्ने गरि आएको छ । '

विदेश मन्त्रालयले भारतलाई चेतावनी दिँदै फेरि अर्को गल्ती नगर्न पनि भनेको छ । 'भारतले कुनै गल्ती नगरोस्। पाकिस्तान आगामी दिनमा भारतको कार्यशैली र व्यवहारको सुक्ष्म समीक्षा गर्नेछ । हामी अन्तर्राष्ट्रिय समुदायसँग पनि यही अनुरोध गर्दछौँ', पाक विदेश मन्त्रालयले अगाडि भनेको छ ।

सोमबार राति भारतीय प्रधानमन्त्री मोदीले 'अपरेसन सिन्दूर' को सन्दर्भमा देशलाई सम्बोधन गर्दै पाकिस्तानलाई चेतावनी दिएका थिए।

'भारतको सेनाले पाकिस्तानमा रहेका आतंककारीका शिविरहरू र तालिम केन्द्रमा सटिक हमला गरेको छ', उनले भनेका थिए, ' पाकिस्तानले आतंकरोधी कारबाहीलाई समर्थन गर्नुको सट्टा भारतमाथि आक्रमण सुरु गऱ्यो ।' उनले भारत पाकिस्तानको कुनै पनि आणविक धम्की नसहने पनि बताएका थिए । 'भारत कुनै पनि न्यूक्लियर ब्ल्याकमेलिङ सहने छैन । अब भारतले आतंककारीहरू र तिनलाई समर्थन गर्ने सरकारलाई फरक रूपमा हेर्ने छैन', मोदीले भनेका थिए ।

पाकिस्तानले भारतको दाबीको खण्डन गर्दै आत्मरक्षाको हक प्रयोग गरेर भारतीय सैन्य ठेगानालाई निशाना बनाएको पनि बताएको छ । पाकिस्तानले सिन्धु जल सम्झौता अनुसार आफ्नो अधिकारको रक्षा गर्न आवश्यक कदम चाल्ने पनि उल्लेख गरेको छ । तर भारतीय विदेश मन्त्रालयले पाकिस्तानले आतंकवादप्रति पूर्ण रूपमा समर्थन नरोकेसम्म सिन्धु नदी सम्झौता निलम्बित रहनेछ जनाएको छ ।

भारतले युद्धविराम पाकिस्तानकै अनुरोधमा गरिएको बताइरहेको छ । तर पाकिस्तानले यसलाई 'झूटो' भनेको छ। पाकिस्तानले युद्धविराम अन्तर्राष्ट्रिय मित्र राष्ट्रहरूको पहलमा सम्भव भएको जनाएको छ । यसलाई पाकिस्तानको कमजोरीसँग नजोड्न पनि उसले आग्रह गरेको छ ।

पाकिस्तानले आफूलाई 'आतंकको शिकार' भएको राष्ट्र भनेर चित्रण गरिरहेको छ । यस घटनाक्रमले भारत र पाकिस्तानबीचको तनावलाई पुनः उजागर गरिदिएको छ।

दुवै देशले आ-आफ्ना कूटनीतिक र रणनीतिक सन्देशहरू विश्व समुदायलाई दिएका छन्। अन्तर्राष्ट्रिय दृष्टिकोणबाट यो अवस्था अझै चर्किन सक्ने संकेत देखिएको छ । स्पष्ट संवाद र कूटनीतिक पहल नभए फेरि दुई छिमेकी भिड्न सक्ने चिन्ता नागरिकस्तरमा छाएको छ ।

# एआई भ्वाइस क्लोनिङ, जुन गोपनीयताको लागि खतरा !



एजेन्सी । एआई भ्वाइस क्लोनिङ स्क्याम : कल्पना गर्नुहोस् कि कसैले तपाईंको फोनमा भन्छ कि "तपाईको आफन्तको केही समय अघि दुर्घटना भएको छ र उसलाई अस्पताल भर्ना हुन केही पैसा चाहिन्छ ।" यो कुरा सुन्दासाथ तपाइले उसलाई तुरुन्तै मद्दत गर्नु हुनेछ । हालसालै यस्तै प्रकृतिको एउटा घटना घटेको छ, जसमा एक व्यक्तिले आफ्नो साथीलाई मद्दत गर्न ३०,००० रुपैयाँ ट्रान्सफर गरे । पछि, जब उनले आफ्नो साथीलाई फोन गरेर उनको स्वास्थ्यलाभको बारेमा जानकारी लिए, उनले थाहा पाए कि उनको साथीको कुनै दुर्घटना भएको छैन र न त उनले मद्दतको लागि फोन नै गरेका छन् । त्यसपछि उनले आफू ठगिएको बुझे ।

अर्को यस्तै घटना प्रकाशमा आएको छ, जसमा एकजना भतिजा पर्नेले आफ्नो काकालाई सहयोग गर्न ३ लाख रुपैयाँ पठाए र पछि थाहा पाए कि उनी ठगिएका थिए । माथिका यी दुवै घटना एआई भ्वाइस क्लोनिङ घोटाला हो, जसमा स्क्यामरहरूले एआईको मद्दतले तपाईंको साथी, आफन्त, श्रीमती, प्रेमिका, प्रेमी, बच्चाहरू आदिको आवाज क्लोन वा प्रतिलिपि गर्छन् र तपाईंबाट ठूलो रकमको आवश्यकताको माग गर्दछ । त्यस समय तपाई मात्र सहयोग गर्ने मनस्थितिमा रहेको परिस्थितिको फाइदा स्कामरले निकाल्छ । जब तपाई त्यसको वास्तविकता थाहा पाउनु हुन्छ । त्यति समयमा आफू ठगिएको पाउनु हुनेछ । तसर्थ एआई भ्वाइस क्लोनिङ धेरै खतरनाक छ, किनकि आवाजमा कुनै फरक हुनेछैन ।

एआई भ्वाइस क्लोनिङ भनेको के हो ?

एआई भ्वाइस क्लोनिङ एउटा यस्तो प्रविधि हो जसमा व्यक्तिको आवाजको ठ्याक्कै प्रतिलिपि बनाउन सकिन्छ । यो प्रविधि प्रयोग गरेर, जो कोहीको पनि आवाज रेकर्ड गर्न सकिन्छ र कुनै पनि प्रकारको सन्देशमा रूपान्तरण गर्न सकिन्छ । यो प्रविधि गोपनीयताको लागि ठूलो खतरा बनेको छ, किनकि यसको दुरुपयोग गरेर ठगी र जालसाजी गर्न सकिन्छ ।

एआई भ्वाइस क्लोनिङबाट बच्ने केही तरिकाहरू :

१. अज्ञात नक्बरबाट कलहरू प्रति सावधानी अपनाउनुहोस् र आफ्नो व्यक्तिगत जानकारी कसैलाई पनि साझा नगर्नुहोस् ।

२. आफ्नो सामाजिक सञ्जाल खाताहरूको गोपनीयता सम्वन्धी सेटिङहरू बलियो राख्नुहोस् ।

३. कुनै पनि शंकास्पद कल वा सन्देशहरूलाई बेवास्ता गर्नुहोस् र तुरुन्तै रिपोर्ट गर्नुहोस् । अर्थात् त्यसको जाँच गर्नुहोस् ।

४. आफ्नो बैंक र अन्य महत्त्वपूर्ण खाताहरूको लागि दुई-कारक प्रमाणीकरण प्रयोग गर्नुहोस् ।

५. आफ्नो आवाजका नमुनाहरू अनलाइनमा सेयर नगर्नुहोस् ।

६. पैसाको कुरा आउँदा आवाज जतिसुकै मिल्दोजुल्दो किन नहोस्, तपाईंले कुरा गरिरहनुभएको व्यक्ति तपाईंलाई चिन्नुहुन्छ कि हुन्न भनेर प्रमाणित गर्नुहोस् ।

७. जब कसैले भन्छ कि उसको फोन स्विच अफ छ वा बिग्रिएको छ र त्यसैले ऊ अरू कसैको फोनमा कुरा गरिरहेको छ । यदि उसलाई पैसा चाहिन्छ भने तुरुन्तै फोन काट्नुहोस् र चिनेको कसैलाई फोन गर्नुहोस् ।

८. कुराकानीको क्रममा, तपाईं र तपाईंको परिचितलाई मात्र थाहा भएका कुराहरूको बारेमा कुरा गर्नुहोस्।

९. एआईले तपाईंले चिन्ने व्यक्तिको आवाजको नक्कल गर्न सक्छ, तर तपाईंले कुराकानीको क्रममा केही शब्दहरूको उच्चारण र स्वरबाट तिनीहरूलाई बुझ्न सक्नुहुन्छ ।



# घरमा पाल्न ल्याएको सिंहले मालिकलाई नै बनायो आहारा

एजेन्सी । इराकको कुफा शहरमा एक हृदयविदारक घटना घटेको छ । जहाँ एक पुरुष आफ्नै बगैंचामा पालेको सिंहको आहारा बन्दै मारिएका छन् । सिंहले ती मालिकको शरीरको ठूलो हिस्सा खाइदिएको छ। उक्त आक्रमण गत बिहीबार भएको हो । यस घटनाले इराकमा बढ्दो अवैध वन्यजन्तु व्यापार र पशुपालनबारे पनि प्रश्न उठाएको डेली मेलले लेखेको छ ।

मृतक ५० वर्षीय अकिल फखर अल-दिनले केही वर्षदेखि सिंह लगायत वन्यजन्तुलाई आफ्नै बगैंचामा राख्दै पाल्दै आएका थिए । तर, बिहीबार उनले हालसालै किनेको सिंहले अप्रत्याशित रूपमा आक्रमण गर्दा मृत्युवरण गर्न बाध्य भए । इराकी सहर नजाफ प्रहरीका प्रवक्ता मुफिद ताहिरले स्थानीय सञ्चारमाध्यम रुदावसँग भने, 'कुफाको एक बगैचामा सिंहले नागरिकमाथि आक्रमण गर्दा उनको तुरुन्तै मृत्यु भएको छ ।'

सिंहले ती इराकी नागरिकको शरीरको धेरै भाग खाइदिएको अवस्थामा भेटिएको उनले बताए । सिंहले उनलाई छोड्न इन्कार गरेकाले मार्नु परेको उनले बताए ।

स्थानीय टेलिभिजन रिपोर्टअनुसार एकजना छिमेकीले कालाश्निकोभ राइफल प्रयोग गरेर सिंहलाई सात गोली हानेका थिए । तर त्यसबेलासम्म अकिल चिन्ताजनक अवस्थामा पुगिसकेका थिए । उनलाई तुरुन्तै अल-सद्र मेडिकल सिटी अस्पताल लगियो । तर गम्भीर चोटका कारण उनको ज्यान गयो, डाक्टरले बचाउन सकेनन् ।

सामाजिक सञ्जालमा भाइरल भएका तस्वीरहरूमा अकिल रगतले लतपत भएर अस्पतालको बेडमा देखिन्छन्। यस घटनाको औपचारिक अनुसन्धान सुरू गरिएको स्थानीय प्रहरीले जनाएको छ । आवासीय क्षेत्रमा यस्तो खतरनाक जनावर कसरी राख्न दिइयो भन्ने प्रश्न उठिरहेको छ ।

सिंहको मृत शरीरको भिडियो समेत सामाजिक सञ्जालमा भाइरल भइरहेको छ । स्थानीय रिपोर्टअनुसार अकिलले उक्त सिंहलाई घरमै पाल्ने उद्देश्यले किनेका थिए। इराकमा यस्तो खतरनाक प्रवृत्ति बढ्दै गएको छ, जसमा मानिसहरूले सिंह, चितुवासहित अन्य जनावरहरू पालिरहेका छन्।

सन् २०१४ मा इराकले अन्तर्राष्ट्रिय वन्यजन्तु संरक्षण सन्धि (साइटिस) मा हस्ताक्षर गरेका थिए । वर्षौंको द्वन्द्व, कमजोर कानुनी कार्यान्वयन र दुर्लभ प्रजातिप्रति बढ्दो मागले इराकलाई वन्यजन्तु तस्करीको हब बनाइरहेको छ । यो घटना इराकमा पहिलो होइन। केही महिनाअघि एक चिडियाखानाका कर्मचारी सिंहको पिजडामा छिरेका थिए । आफ्नी प्रेमिकालाई प्रभावित पार्न खोज्दा सिंहले उनलाई मारिदिएको घटना चर्चामा आएको थियो।

नजाफमा भएको यो दुःखद घटनाले वन्यजन्तुलाई घरपालुवा जनावरको रूपमा पाल्नु कति खतरनाक हुन सक्छ भन्ने कुरा दर्शाएको छ । इराकमा जनावरको अवैध व्यापार र पालनपोषण रोक्न तत्काल कडा कदम चाल्न आवश्यक रहेको सन्देश दिएको छ ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### सामाजिक सञ्जालको प्रयोग घृणा र द्वेष फैलाउने माध्यम नबनोस् !

वर्तमान समय सूचनाको लागि सामाजिक सञ्जालको प्रयोग बढ्दो क्रममा रहेको छ । यसले सामाजिक रुपमा व्यापकता पनि पाउदै गएको छ । तर यही सूचनाको माध्यम मानव जीवनको लागि बरदान र अभिशाप दुवै भएको छ । हामीले सानैमा विज्ञान र प्रविधिलाई मानव जीवनको लागि बरदान र अभिशापको रुपमा ग्रहण गर्दै आएको विषय पनि हो ।

एकातर्फ सामाजिक संजाल सूचना प्रवाहको लागि अपरिहार्य माध्यम बनेको छ भने यही माध्यम समाजमा भ्रम छर्ने माध्यमको रुपमा विकसित हुँदै गएको अवस्था छ । जसको कारण मानिसमा सजग र इमानदार नहुने प्रवृत्ति हाबी हुँदै गएको छ । प्रविधिको विकाससँगै पहुँच पनि व्यापक भएकाले सामाजिक सञ्जालको प्रयोगमा पनि नकारात्मक प्रवृत्ति बढेको हो ।

हुन त कुनै पनि माध्यमका प्रयोगकर्ताले समाजको अहित नहुनेगरी अभ्यास गर्नुपर्ने सर्त स्वीकार गरेका हुन्छन् । तर, समाजमा घृणा र द्वेष फैलाउनैका लागि सञ्जालका विभिन्न माध्यमको दुरुपयोग भएरहेको छ ।

केही समय अगाडि भारतको कश्मीर प्रान्त स्थित पलगाममा आतङ्ककारीद्वारा २६ जनाको हत्या गरिएपछि भएको भारतको 'कारबाही' र पाकिस्तानी प्रत्युत्तरको क्रम बढेर पूर्ण युद्धको स्थितमा पुगेको थियो । युद्धले नेपालमा पनि पार्न सक्थ्यो । भारत-पाकिस्तानबीच द्वन्द्वबाट विशेषगरी विद्यार्थीहरू जोखिम बढेको थियो । जसमा नेपालीहरूले चलाएका सामाजिक सञ्जालमा भने घृणा र द्वेष फैलाउने सामग्री बढी सम्प्रेषण गरिएको देखिन्छ ।

यस्तै केही समय पहिले नेपालकै भक्तपुर जिल्लाको समुदायस्तरमा उत्पादन हुने र विश्वमै ख्याती कमाएको जुजु धौका सम्वन्धमा सरकारी नियमनकारी संस्थाबाट अनुगमनको क्रममा केही कैफियत फेला पारेको घटनालाई सामाजिक सञ्जालबाट समुदायकै बदनाम गराउने र स्थानीय उत्पादनको रुपमा नेवाः समुदायले पुर्खाका पालादेखि चलाउँदै आएको पेशालाई धरापमा पार्न कै लागि सामाजिक सञ्जाल मार्फत समुदायकै पेशा र बिश्वमै ब्राण्डको रुपमा स्थापित खाद्य सामाग्री प्रति घृणा र द्वेष फैलाउने चेष्टा भएको देखियो । जसलाई चिर्न राज्य पनि सावधान हुनुपर्ने देखिएको छ । समाजमा विद्वेषको विष नफैलँदै प्रभावकारी निगरानी र नियमन जरुरी हुन्छ । तर सरकारी नियमनकारी निकायले समयमै सो सम्बन्धमा सत्य तथ्य विषय सार्वजनिक गर्दै प्रेस नोट जारी गरेपछि यो विषयले विराम पाएको छ । तर अझै पनि यो विषय सामाजिक संजालमा रहेकोले धेरै मानिसमा भ्रम सिर्जना गर्ने खतरा भने कायम रहेको छ । तसर्थ यस्ता क्रियाकलाप राख्नकै लागि विद्युतीय अपराधलाई नियन्त्रण गर्न बर्तमानमा अत्यावश्यक भईसकेको छ । साथै सामाजिक सञ्जालको प्रयोगकर्ताले पनि कुनै पनि समाचार घटना बास्तविकतामा नै घटेको हो वा होइन जाँच गरी मात्र सामाजिक सञ्जालमा साझा गर्नुपर्ने दायित्व हो । नकि भाइरल बन्ने र भ्युजकै लागि सामाजिक सञ्जाल प्रयोग गर्ने विरुद्ध राज्य कठोर बन्ने पर्दछ ।

तसर्थ, सामाजिक सञ्जालका प्रयोगकर्ताहरू स्वयं नै परिस्थितिको गम्भीरतालमई आत्मसात गर्दै आफ्नो दायित्वप्रति सजग हुनेछन् । राज्यले नियन्त्रण गर्नुपर्ने अवस्था आउन दिनेछैनन् ।

# छापा पत्रकारिताः सम्भावना र रणनीति–३

● *रमेशकुमार बोहोरा*

आफ्नो मोबाइलमा आउने नाटकीय शीर्षक, छोटो भिडियो क्लिप वा आकर्षक फोटोसहितको समाचारले धेरैलाई आकर्षित गरेको छ । छापा पत्रिकाको लामो लेख वा विश्लेषणात्मक सामग्री पढ्न अहिलेका धेरै पाठकहरूमा धैर्यता घटिरहेको देखिन्छ ।

नयाँ पत्रकारिता शैली र छापा पत्रकारिताको संघर्ष

डिजिटल मिडियाले छोटो, सरल र आकर्षक सामग्री प्रस्तुत गर्न थालेको छ । "ज्भबमष्लिभ-मचषखभल वयगचलबष्कि" अर्थात् शीर्षक केन्द्रित पत्रकारिता हाबी हुँदै गएको छ ।

छापा पत्रिकामा गहिरो विश्लेषण, पूर्ण रिपोर्ट र तथ्यांकसहितको सामग्री दिइए पनि तत्कालको जमानामा त्यो शैली सुस्तजस्तो देखिन थालेको छ । छापा पत्रिकाले आफ्नो गहिराइ र विश्वसनीयता कायम राख्न संघर्ष गरिरहेको छ, तर डिजिटल गतिशीलताले पाठकको रुचि फेरिएको छ ।

आर्थिक दबाब र विज्ञापन बजारमा ह्रास

विज्ञापनदाताहरू पनि डिजिटल माध्यमतिर सर्न थाले । कम लागतमा धेरै मान्छेसम्म पुग्न सकिने भएकाले कम्पनीहरूले अब अनलाइन विज्ञापनलाई प्राथमिकता दिन थालेका छन् । छापा पत्रिकाले बाँच्नका लागि विज्ञापनमा निर्भर रहने हुँदा यसले ठुलो आर्थिक संकट निम्त्याएको छ ।विज्ञापन आम्दानी घटेपछि छापा पत्रिकाहरूले स्टाफ कटौती, पृष्ठ संख्या घटाउने, छाप्ने दिनहरू सीमित गर्ने जस्ता उपाय अपनाउन थालेका छन् । कतिपयले त छापा संस्करण बन्द गरेर केवल अनलाइनमा मात्र सेवा दिन थालेका उदाहरणहरू पनि देखिन्छन् । यी सबै प्रविधि-केन्द्रित परिवर्तनहरूले गर्दा अहिले छापा पत्रकारिता अस्तित्व जोगाउन संघर्षमा उत्रिएको छ ।

छापा पत्रकारितामा आएको नयाँ अवसर र अनुकूलनको प्रयास

यद्यपि प्रविधिको तीव्र विकासले छापा पत्रकारिता क्षेत्रलाई गम्भीर चुनौती दिएको छ, तर यसले केही नयाँ अवसरहरू पनि सिर्जना गरेको छ । परिवर्तनलाई आत्मसात् गर्दै धेरै छापा पत्रिकाहरूले आफूलाई नयाँ समयअनुसार ढाल्ने प्रयास गरेका छन् । छापा पत्रकारिता अब केवल कागजमा मात्र सीमित नभई डिजिटल प्लेटफर्महरूमार्फत पनि आफ्नो उपस्थिति बलियो बनाउने दिशामा अघि बढेको छ ।

डिजिटल संस्करण (भ-उबउभच) को विकास

छापा पत्रिकाले आफ्नो डिजिटल रूपान्तरण सुरु गरेका छन् ।

अहिले छापा पत्रिकाले आफ्नो 'ई-पेपर' संस्करण सञ्चालन गरेका छन्, जहाँ पाठकले मोबाइल, ट्याब्लेट वा कम्प्युटरबाट छापा संस्करण जस्तै पूरा पत्रिका पढ्न सक्छन् । यसले विदेशमा रहेका नेपाली, व्यस्त जीवनशैली भएका पाठकहरू र डिजिटलमैत्री पुस्तालाई जोड्ने काम गरेको छ ।

मल्टिमिडिया सामग्रीको समावेशीकरण

केवल लेख र फोटोमा सीमित नभई छापा पत्रिकाले अब भिडियो रिपोर्टिङ, पोडकास्ट, इन्फोग्राफिक्स र अन्तरक्रियात्मक सामग्री विकासमा ध्यान दिन थालेका छन् ।

उदाहरणका लागि, ठूला घटनाको समाचार केवल लेखमा मात्र नभई, भिडियो क्लिप, तथ्यांकसहितका इन्फोग्राफिक्स र लाइभ अपडेटमार्फत पनि प्रस्तुत गरिन्छ । यसले नयाँ पुस्ताको ध्यान आकर्षित गर्न सहयोग पुर्‍याइरहेको छ ।

सोसल मिडिया प्रयोग

छापा पत्रिकाहरूले पनि फेसबुक, ट्वीटर, युट्युब जस्ता सामाजिक सञ्जालहरूमा सक्रियता बढाएका छन् । नयाँ समाचार तुरुन्तै सामाजिक सञ्जालमा सेयर गर्ने, छोटो भिडियो रिपोर्ट बनाउने र पाठकसँग प्रत्यक्ष संवाद गर्ने प्रवृत्ति बढेको छ । यसरी सोसल मिडियालाई सही ढंगले प्रयोग गर्दा पत्रिकाहरूले आफ्नो पहुँच बढाउन सफल भएका छन् ।

नयाँ व्यवसाय मोडेलहरू

पहिले जस्तो केवल विज्ञापनमा आधारित आम्दानी प्रणाली अब परिवर्तन हुँदैछ । केही पत्रिकाहरूले 'पेड सब्सक्रिप्सन' मोडेल अपनाउन थालेका छन्, जहाँ पाठकले विशेष सामग्री पढ्न सदस्यता लिनुपर्ने हुन्छ । त्यसैगरी, इभेन्ट म्यानेजमेन्ट, ब्रान्डेड कन्टेन्ट (क्उयलकयचभम ब्चतष्अभिक) र विशेष कार्यक्रमहरू आयोजना गरेर नयाँ आयस्रोत सिर्जना गर्ने प्रयास भइरहेका छन् ।

गहिरो र विश्लेषणात्मक सामग्रीप्रति चासो

यद्यपि छोटो र छिटो समाचार डिजिटलमा लोकप्रिय भए पनि, अझै पनि गहिरो अनुसन्धानात्मक रिपोर्ट, विशेष रिपोर्टहरू र दीर्घ अन्तरवार्ताहरूको माग छ । छापा पत्रिकाले यस्ता गुणस्तरीय सामग्री तयार पारेर आफूलाई अन्य मिडियाबाट अलग र विशिष्ट बनाउन सक्छन् ।

शिक्षित र परिपक्व पाठक वर्ग लक्षित प्रयास

छापा पत्रिकाहरूले अब सामान्य सूचना मात्रै नभई विश्लेषण, व्याख्या र समग्र परिदृश्य बुझाउने खालका सामग्रीहरू विकास गरेर शिक्षित, परिपक्व र गम्भीर पाठक वर्गलाई लक्षित गर्न थालेका छन् । यस्ता पाठकहरू अझै पनि छापा पत्रिकाप्रति आकर्षित रहने सम्भावना उच्च हुन्छ । यसरी, चुनौतीबीच पनि छापा पत्रकारिताले नयाँ अवसरहरू फेला पार्दै, आफूलाई समयअनुसार अद्यावधिक गर्ने र नविकरण गर्ने अभियान सुरु गरेको छ । तर, सफलताका लागि अनवरत सिर्जनशीलता, विश्वसनीयता र पाठकमैत्री नीतिहरू अवलम्बन गर्नु अपरिहार्य देखिन्छ ।

भविष्यको छापा पत्रकारिता

प्रविधि र जीवनशैलीको तीव्र परिवर्तनले परम्परागत छापा पत्रकारिता क्षेत्रलाई गम्भीर चुनौती दिएको यथार्थ नकार्न सकिँदैन । तर, चुनौतीसँगै भविष्यका लागि थुप्रै सम्भावनाहरू पनि रहेका छन् । सस्तो, छिटो र सर्वसुलभ सूचना प्रवाहको युगमा पनि गहिरो, सुसंगठित र विश्वासिलो सूचना प्रदान गर्ने छापा पत्रकारिताको महत्व कायम रहन सक्छ, यदि केही रणनीतिक सुधारहरू अपनाइए भन।

१. गहिरो पत्रकारितामा ध्यान केन्द्रित गर्नु

त त का ल का समाचारभन्दा पनि छापा पत्रिकाले दीर्घ विश्लेषणात्मक रिपोर्टिङ, अनुसन्धानमूलक पत्रकारिता, तथ्यमा आधारित विशेष फिचरहरू उत्पादनमा जोड दिनु पर्छ । अनलाइनमा पाइने सतही सूचना भन्दा फरक, विश्वसनीय र गहिरो सामग्रीले मात्र पाठकको आकर्षण पुनः प्राप्त गर्न सकिन्छ ।

२. गुणस्तरीय सामग्रीमा लगानी बढाउनु

सस्तो र चटपटे समाचारले अस्थायी ध्यान त तान्न सक्छ तर दीर्घकालीन पाठक बिस्तारका लागि सामग्रीको गुणस्तर महत्वपूर्ण हुन्छ । सम्पादकीय स्वतन्त्रता, भाषाको सौन्दर्य, तथ्यमा आधारित समाचार र विविधतापूर्ण विचार विमर्शलाई बढावा दिनु जरुरी छ ।

३. डिजिटलसँग सहअस्तित्व विकास गर्नु

छापा र डिजिटललाई प्रतिस्पर्धी होइन, पूरकका रूपमा हेर्नु पर्छ । छापा संस्करणले गहिरो सामग्री दिनु, डिजिटल प्लेटफर्मले ताजा अपडेट र अन्तरक्रियात्मक सेवा दिनु – यस्तो सहअस्तित्वले दुबै माध्यमलाई सशक्त बनाउन सक्छ ।ई-पेपर, मोबाइल एप, सामाजिक सञ्जालबाट पाठकसँग नियमित सम्पर्क बढाउनु अत्यावश्यक हुन्छ ।

४. लक्षित पाठक वर्ग निर्माण गर्नु

सबैका लागि समाचार उत्पादन गर्ने रणनीति अब सफल छैन ।छापा पत्रिकाले विशेष लक्षित समूह (जस्तै, शिक्षित युवा, सरकारी कर्मचारी, व्यवसायी, बौद्धिक वर्ग) पहिचान गरी तिनका चासोका विषयमा सामग्री उत्पादन गर्नुपर्छ । विशेष क्षेत्रका लागि विशेष संस्करण (जस्तै, आर्थिक समाचार, अन्तर ाष्ट्रिय सम्बन्ध, विज्ञान र प्रविधि, शिक्षा इत्यादि) विकास गर्न सकिन्छ ।

५. नयाँ आयस्रोतको खोजी

अब छापाले विज्ञापनमा मात्रै निर्भर रहने मोडेल असफल भइसकेको छ । त्यसैले सदस्यता शुल्क, प्रिमियम कन्टेन्ट सेवा, विशेष रिपोर्टको बिक्री, अनलाइन-अफलाइन तालमेल कार्यक्रमहरू, ब्रान्डेड इभेन्टहरू, विशेष पुस्तक प्रकाशन जस्ता माध्यमबाट नयाँ आर्थिक मोडल निर्माण गर्नु जरुरी छ ।

६. पाठकसँग प्रत्यक्ष संवाद र सम्बन्ध विस्तार

छापा पत्रिकाले आफ्नो पाठक समुदायसँग सक्रिय संवाद कायम गर्नुपर्छ । पाठकको सुझाव, प्रतिक्रिया र मागलाई सुन्ने र सम्बोधन गर्ने संस्कार विकास गर्दा पाठकसँग गहिरो सम्बन्ध बन्नेछ । नयाँ प्रविधिको प्रयोग गरेर प्रत्यक्ष संवाद कार्यक्रम, अनलाइन फोरम र पाठक मञ्चहरू सञ्चालन गर्न सकिन्छ ।

७. क्षेत्रीय र भाषागत विविधताको उपयोग

नेपाली समाज विविधतायुक्त छ – जातीय, क्षेत्रीय, भाषिक विविधता छापा पत्रिकाले क्षेत्रीय भाषा, संस्कृतिलाई सम्बोधन गर्ने र ग्रामीण भेगसम्म पनि पुग्ने विशेष संस्करण निकालेर नयाँ पाठक समूह सिर्जना गर्न सक्छ । यसो गर्दा राष्ट्रिय स्तरमा आफ्नो पहुँच फैलाउन सकिन्छ ।

८. निष्ठा, पारदर्शिता र जिम्मेवारीलाई प्राथमिकता

मिडियामाथि बढ्दो अविश्वासको वातावरणमा छापा पत्रिकाले आफ्नो निष्ठा, पारदर्शिता र सामाजिक जिम्मेवारीलाई पहिलो प्राथमिकता दिनैपर्छ । निरपेक्षता, निष्पक्षता र जनहितका पक्षमा नडगमगाई उभिन सके मात्र पाठकको हराउँदै गएको विश्वास पुनःस्थापित गर्न सकिन्छ ।

त्यसैले समय र प्रविधिको गतिशील यात्राले हरेक क्षेत्रलाई जस्तै सञ्चार माध्यमलाई पनि गहिरो प्रभाव पारेको छ ।नेपालमा २०४६ सालको जनआन्दोलनपछि छापा पत्रकारिताको पुनर्जागरण भएको थियो । त्यसयता थुप्रै आरोह-अवरोह पार गर्दै छापा पत्रकारिता अगाडि बढ्यो । तर पछिल्लो प्रविधि विस्फोट र डिजिटल मिडियाको वर्चस्वसँगै यसको अस्तित्व नै संकटमा परेको छ । अनलाइन पोर्टलहरू, सामाजिक सञ्जाल र मोबाइल पत्रकारिताले सूचना उपभोगको शैलीलाई क्रान्तिकारी ढंगले परिवर्तन गरेका छन् । छापा पत्रकारिताले समयमै आफूलाई परिमार्जन नगर्दा पाठक संख्या घटेको र आर्थिक दबाब बढेको देखिन्छ ।यद्यपि, यो परिवर्तनलाई अवसरका रूपमा लिन सक्ने हो भने छापा पत्रकारिताका लागि भविष्य अझै सम्भावनापूर्ण छ ।

गहिरो अनुसन्धानमूलक पत्रकारिता, तथ्यमा आधारित विशेष सामग्री, विश्लेषणात्मक रिपोर्ट र समाजमा सकारात्मक परिवर्तन ल्याउने धारिलो भूमिका आज पनि छापा पत्रिकाको बलियो पक्ष हो । डिजिटल प्रविधिसँग सहअस्तित्व विकास गर्दै गुणस्तरीय सामग्री उत्पादन, लक्षित पाठक सिर्जना र नयाँ व्यवसायिक मोडेलको खोजी गरेर छापा पत्रकारिता पुनः उत्कर्षमा पुग्न सक्छ । विश्वसनीयता, पारदर्शिता र निष्ठा जस्ता मूल्यमान्यतामा आधारित भएर छापा पत्रकारिता अघि बढेमा प्रविधिको लहरसँग जुध्दै पनि आफ्नो गरिमा जोगाउन सक्छ । कागजमा मात्रै होइन, डिजिटल स्पेसमा पनि आफूलाई प्रभावकारी बनाउँदै, सत्य र सूचनाको सेतु बन्ने चुनौती स्वीकार्न छापा पत्रकारिता तयार हुनैपर्छ ।

( लेखक बोहोरा अर्थ सवाल साप्ताहिकका सम्पादक तथा नेपाल पत्रकार महासंघ काठमाडौं शाखाका सचिव हुन् )

**समाप्त**

# प्रकृतिको दोहन जोकोही सच्चा नेपालीको मन कटक्क खान्छ.....



भक्तपुर । सूर्यविनायक नगरपालिका-९ काँक्राबारी रातोमाटेको कहाली लाग्दो अग्लो घिसिङ डाँडा । डाँडासँगै जोडिएका झपक्कै हरिया सामुदायिक वन । एक महिना अगाडिसम्म सानो बस्ती देखिन्थो तर अहिले जङ्गलको मुहानबाट स्थानीयले खानेपानीका लागि ल्याएका धारा, हरिया जङ्गल उराठ देखिन थालेका छन् ।

यहाँको दृश्य देख्दा त्यहाँ पुग्ने जोकोही सच्चा नेपालीको मन कटक्क खान्छ । तर एक महिनादेखि दुई दर्जन डोजरले यहाँको प्रकृति दोहोन गरिँदा नजिकैको स्थानीय सरकारदेखि, डिभिजन वन कार्यालय र जिल्लाका सबै सरोकारवाला निकाय बेखबर झैं भए । जैविक विविधता र प्रकृतिमाथि दोहोन भइरह्यो ।

यतिखेर यहाँको करिब चार सय ५० रोपनी ठारो भीर डोजरले कटान गरी उजाड बनाएको छ । निक भुजिकिक हाउजिङ प्रालिले जग्गा खण्डिकरण गरी आवास निर्माणका लागि भन्दै स्थानीय लामा बस्तीका बासिन्दासँग खरिद गरेको जग्गामा डोजर मात्रै चलाएन यहाँको प्रकृति, कुलो, सार्वजनिक बाटो, सानो लामा बस्ती, सार्वजनिक जग्गा र वन क्षेत्रसमेत मासेको छ ।

स्थानीयले गुनासो गरेसँगै भक्तपुरका प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्यालको नेतृत्वमा जिल्ला प्रहरी परिसर भक्तपुरका प्रहरी उपरीक्षक, सशस्त्र प्रहरी गण दुवाकोटका प्रहरी उपरीक्षक, नापी कार्यालय, उपत्यका विकास प्राधिकरण भक्तपुर शाखा, डिभिजन वन कार्यालय, सूर्यविनायक नगरपालिकाका प्रशासकीय प्रमुख, वडा अध्यक्ष र पत्रकारको टोलीसहित स्थलगत अनुगमन गरेको छ ।

प्रजिअ अर्यालले भने, "यहाँ प्रक्रिया पूरा गरेर काम गरेको देखिएन, सम्बन्धित निकायसँग अनुमति नलइ नआधिकृत रूपमा डोजर चलाएको पाइयो । त्यसैले सार्वजनिक जग्गा, वन क्षेत्र कति अतिक्रमण भएका छन्, सबैको आधिकारिक प्रतिवेदन तयार पार्नेछौं । गैरकानुनी भए हामी कारबाही गर्छौं । प्रक्रिया पूरा गरेर नआएसम्मका लागि आजैदेखि यहाँ डोजर चलाउन र काम गर्न रोक्न निर्देशन गर्नेछु ।"

यस क्षेत्रमा समस्या अइसकेपछि यहाँका विषयतगत कार्यालयसँग छलफल गरी यथार्थ विवरण लिने र कम्पनीलाई बोलाएर सोधपुछ गर्ने बताउँदै उनले सार्वजनिक जग्गा र वन क्षेत्र छुट्याएर सम्पूर्ण प्रक्रिया पूरा गरेर नआएसम्मका लागि कुनै पनि काम नगर्न कम्पनीका नाममा आजै लिखित पत्राचार गर्ने उनले बताए ।

स्थानीयले साविक नंखेल गाविस वडा नं-४ 'क' र 'ख' मा पर्ने उक्त क्षेत्रमा प्लटिङका नाममा जङ्गल क्षेत्र, खानेपानीको मूल, पाटी, कुलो, बाटो, पाइपलाइन, खोलालगायत संरचना मासिएको र जोखिममा रहेका ६ घर लामा टोलका घरहरू भत्काएर बस्ती सारिएको छ ।

सुनपा-९ का वडाध्यक्ष भगवान् खत्रीले जग्गा प्लटिङ कम्पनीले दुई महिना अगाडि सार्वजनिक सुनुवाइ गर्दा यहाँका स्थानीयवासी, चार वटा गुठीसमेतको सहमति भएपछि मात्रै वडा कार्यालयले सूर्यविनायक नगरपालिकालाई सिफारिस गरेको बताउनुभयो ।

उनले भने, "यसअघि म आउँदा सार्वजनिक जग्गा र वन क्षेत्र मिचिएको थिएन, तर अहिले आउँदा १२ रोपनी सार्वजनिक जग्गा र १९ रोपनी वन क्षेत्र मिचिएको पाइयो ।"

अनुगमन टोलीमै रहेका सूर्यविनायक नगरपालिकाका प्रमुख प्रशासकीय अधिकृत तारानाथ लुइँटेलले नगपालिकाले उपत्यका विकास प्राधिकरणलाई सिफारिसम्म दिने बताउँदै यसलाई स्वीकृत दिने निकाय नगरपालिका नभइ प्राधिकरण भएको बताए । उनले भने, "नगरपालिकामा जग्गा सम्याउने भनेर कम्पनीको तर्फबाट निवेदन आएको थियो । नगरपालिकाले अनुमति दिइसकेको छैन । साइड क्लिरियन्सको नाममा स्वीकृत नै नलिइ धेरै काम भइसके छ । यहाँको बस्ती नै हटेछ, हामी पनि छक्क परेका छौं । अब थप काम अगाडि बढाउन पाइँदैन ।"

काठमाडौं उपत्यका विकास प्राधिकरण भक्तपुर शाखाका प्रमुख सफल श्रेष्ठले ५० रोपनीभन्दा माथिको जग्गा प्लानिङका लागि प्राधिकरणको केन्द्रीय कार्यालयसँग अनुमति लिनुपर्ने भएकाले यसबारेमा जिल्ला कार्यालयलाई कुनै जानकारी नभएको बताउनुभयो । डिभिजन वन कार्यालयका कर्मचारी दिनेश थापामगरले नापी कार्यालयको टोली बोलाएर वन क्षेत्र छुट्याएर किला ठोके पनि करिब १९ रोपनी वन क्षेत्रफलमा डोजर चलाएको बताउँदै यहाँको सल्लाको रूख कटान भएको बताए ।

काँक्रबारी भित्री सामुदायिक वन उपभोक्ता समितिका अध्यक्ष रामकृष्ण तामाङले सामुदायिक वनको करिब १९ रोपनी क्षेत्रफलमा रहेको बुट्यान र सल्लाका रूख कटान भएको बताउँदै यहाँबाट गढी जाने पदमार्ग, घाँस दाउरा गर्न जाने बाटो, कुलो र पानीको पाइप मासिएको बताए ।

नापी कार्यालयका सर्वेक्षक राजीव श्रेष्ठले नापी कार्यालय सिमाङ्कनसम्म गरिदिने बताउँदै भूउपयोग नियमावली बमोजिम कित्ताकाट गरेर राजीनामा लिखित गरी मालपोतबाट आएपछि मात्रै नापीले काम गर्ने बताए ।

सङ्घर्ष समिति अध्यक्ष स्थानीयले प्रेमबहादुर तामाङ, उपाध्यक्ष एकराज तामाङ, सचिव सुनिल तामाङ डोङलगायतले एक महिनासम्म डोजर चलेर प्रकृति विनाश भइरहँदा पनि सरोकारवाला मौन बस्नुको रहस्य खोज्नुपर्ने बताए ।

समितिका अध्यक्ष तामाङले यहाँका करिब ६० घरधुरीले प्रयोग गर्दै आएको खानेपानी बन्द भएको, २० रोपनीभन्दा बढी वन तथा सार्वजनिक जग्गा अतिक्रमणमा परेको बताए ।

हाउजिङ कम्पनीका अध्यक्ष पूर्णबहादुर लिम्बूले भने कम्पनीमाथि लागेको आरोप निराधार भएको दाबी गरे । उनले प्रेस विज्ञप्ति नै जारी गर्दै वडा कार्यालयबाट सिफारिस प्राप्त भई नगरपालिकामा फाइल पेस गरी नगरपालिकाबाट निर्णयको अन्तिम चरणमा रहेको, आवश्यक वातावरणीय प्रभाव मूल्याङ्कन प्रक्रिया पूरा गरी सम्बन्धित सरकारी निकायबाट स्वीकृति प्राप्त गरिसकिएको दाबी गरे ।

माटोको गुणस्तर परीक्षण गरिएको, खहरे खोल्सीहरूको हकमा पानीको बहावमापन तयार गरिएको, आयोजना क्षेत्रभित्र पर्ने सरकारी जग्गा, गोरेटो, कुलो खोल्सीको हकमा उपत्यका विकास प्राधिकरणको नियमअनुसार नै सार्वजनिक सम्पत्तिको संरक्षण गरिने, प्राधिकरणबाट निर्णय प्रक्रियाको चरणमा रहेको बताए ।

# सुगर निको पार्न जामुन अचुक औषधि !



एजेन्सी । गर्मीमा मधुमेह रोगीका लागि निकै फाइदाजनक एक फलका बारेमा हामी बताउँछौं, जसको नाम हो जामुन ।

कालो जामुन मधुमेह रोगीका लागि औषधि भन्दा कम छैन, जामुनलाई आयुर्वेदमा निकै फाइदाजनक मानिन्छ । जामुन विशेषगरी मधुमेह नियन्त्रणमा प्रभावकारी मानिँदै आएको छ ।

जामुनले रगतमा चिनीको मात्रा कम गर्न मद्दत गर्छ। यस बाहेक जामुन पेट र पाचन सुधार गर्न पनि प्रभावकारी साबित हुन्छ। जामुन खानु दाँत, आँखा, अनुहार, मिर्गौलाको पत्थरी र कलेजोका लागि पनि फाइदाजनक हुन्छ । चिनीमा भिटामिन र फाइबरले भरिपूर्ण जामुन कसरी प्रयोग गर्ने भन्ने बारेमा विस्तृतमा जानौं।

आचार्य बालकृष्णका अनुसार जामुनको सेवन मधुमेहका बिरामीका लागि निकै फाइदाजनक हुन्छ । आयुर्वेदमा जामुनको फल, बीउ र पातहरू प्रयोग गरिन्छ। मधुमेहका बिरामीले जामुन कसरी प्रयोग गर्ने भन्ने उपाय हामी सिकाउँछौं ।

पहिलो विधिः जामुनको दानालाई पिसेर धुलो बनाउने । अब एक भाग जामुन (ब्ल्याकबेरी) सीड पाउडर, एक भाग शुन्थी पाउडर र दुई भाग गुडमार जडीबुटी मिलाउनु होस्। सबै सामग्रीलाई पिसेर पाउडर बनाउनु होस् र छान्नुहोस्। यस पाउडरलाई एलोभेराको जुसमा मिसाएर पिउनु होस्। यदि तपाईं चाहनुहुन्छ भने यसलाई चक्की बनाएर दिनको तीन पटक खानुहोस्। यसले चिनी नियन्त्रण गर्न मद्दत गर्नेछ।

दोस्रो विधिः करिब १०० ग्राम जामुनको जरा लिनुहोस् र यसलाई राम्ररी सफा गर्नुहोस्। अब यसमा अलिकति पानी हालेर पिस्नु होस् । २० ग्राम चिनी मिठाईमा मिसाएर मिश्रण खानुहोस्। यो धुलो बिहान बेलुका खाँदा मधुमेहमा फाइदा हुन्छ ।

तेस्रो विधिः २५० ग्राम पाकेको जामुन र आधा लिटर उमालेको पानीमा हाल्नुहोस्। केही समय उमालेपछि पानी अलिकति चिसो भएपछि जामुनलाई पिसेर छान्नुहोस् । अब यो पानी दिनमा ३ पटक पिउनुहोस् । यसले चिनी नियन्त्रण गर्न मद्दत गर्नेछ।

चौथो विधिः जामुनको बोक्रा पनि चिनी कम गर्न प्रयोग गरिन्छ। यसका लागि जामुनको बोक्रालाई पिसेर खरानीमा परिणत गर्नुहोस् । ६५० मिलीग्राम देखि २ ग्रामको मात्राको खरानी दैनिक उपभोग गर्नुहोस्। यसले मधुमेह हुनबाट कम गर्न मद्दत गर्नेछ।

मौसमी फल भएको कारण यो सधैं पाउन सकिँदैन । तर यसको बियाको प्रयोग तपाईले सधैं गर्न सक्नु हुनेछ । जसको प्रयोगले तपाईंको मधुमेह पूर्ण रूपमा नियन्त्रणमा आउन सक्ने छ । आयुर्वेदमा जामुनको बियालाई कयौं औषधीको रूपमा प्रयोग गरिएको पाइन्छ । जसमध्ये एक मधुमेहको उपचार पनि हो ।

# एआइले नर्सिङलाई प्रतिस्थापन गर्न सक्दैन

काठमाडौं । अबको केही वर्षमा एआईले इन्जिनियरिङ र मेडिकल क्षेत्रका जनशक्तिलाई प्रतिस्थापन गर्ने हल्ला चलिरहेको अवस्थामा विज्ञान र प्रविधिले पछिल्लो समय विकास गरेको एआईले अन्य पेशालाई असर गरेपनि नर्सिङ पेशालाई कुनै असर गर्न नसक्ने नेपाल मेडिकल कलेजकी प्रबन्ध निर्देशक डाक्टर साविहा यासमिनले बताएको छ । आइतबार अन्तराष्ट्रिय नर्सिङ दिवसको पूर्वसन्ध्यामा आयोजित कार्यक्रममा बोल्दै कलेजकी प्रबन्ध निर्देशक डा. यासमिनले स्वास्थ्य सेवा क्षेत्रको मेरुदण्डका रुपमा रहेको नर्सिङ पेशाको विकल्प नै नरहेको जिकीर गरे ।

'बिरामीको सेवा र उपचारमा नर्सहरुको महत्वपूर्ण भूमिका हुन्छ । कुनैपनि स्वास्थ्य सेवाको म्यानेजमेन्ट सिस्टममा नर्सहरु पर्दा पछाडीका हिरो हुन । बिरामीलाई यतिधेरै केयर गरिदिनुहुन्छ कि तपाईहरुको ठाउँ कुनै डाक्टरले लिन सक्दैनन् । एआइले पनि तपाईहरुको करुणा, माया र हेल्थ केयरलाई रिप्लेस गर्न सक्दैन । डाक्टरहरुको त्यत्ति खोजी हुँदैन जति नर्सहरुको हुन्छ । नर्सहरुले बिरामीको लागि गर्ने स्वास्थ्य सेवा अद्भुत रहेको भन्दै उनले भने । डा. यासमिनले नर्सहरुलाई आमाको संज्ञा दिँदै बिरामीको स्वास्थ्य हेरचाहमा नर्सहरुले गरेको योगदानलाई प्रत्येक बिरामीहरुले धन्यवाद दिनुपर्ने पनि बताए । 'नर्सहरुको काममा कसैसँग तुलना हुन सक्दैन । बिरामीले डाक्टरलाई जसरी धन्यवाद भनेर जानुहुन्छ त्यसरी नै नर्सहरुलाई पनि भन्नुपर्छ ।'

प्रबन्ध निर्देशक डा. यासमिनले हेल्थ केयर सिस्टममा डाक्टहरु मस्तिष्क भए नर्सहरु मुटु रहेको जिकीर गरे । ८० प्रतिशत बिरामीहरु नर्सहरुको स्याहारका कारण निको भएर घर जान सकेको बताउँदै जुनदिन नर्स हुँदैनन् त्यही दिन हेल्थकेयर सिस्टम विश्वबाट कोल्याप्स हुने उनको दावी छ । '८० प्रतिशत बिरामीहरु तपाईहरुका कारण घर गइरहनु भएको छ । जुनदिन नर्सहरु हुनुहुन्न त्यो दिन विश्वभरबाट हेल्थकेयर सिस्टम कोल्याप्स हुन्छ ।' नेपाल मेडिकल कलेज नर्सिङ सेवालाई सवल, प्रभावकारी बनाउन सदैव सकारात्मक रहेको बताए । कलेजले नर्सहरुको क्षमता अभिबृद्धि गर्नका लागि समयसमयमा तालिमहरु दिने गरेकोसमेत जानकारी दिए ।

कार्यक्रममा बोल्दै कलेजका प्रिन्सिपल प्रा.डा. मोदनाथ मरहट्ठाले प्रत्येक नर्सहरुले आफुलाई फ्लोरेन्स नाइटेङ्गल बनाउन प्रेरित हुनुपर्ने बताए । फ्लोरेन्स नाइटेङ्गलले विश्वकै स्वास्थ्य क्षेत्रमा क्रान्ति गरेको स्मरण गर्दै आइसियूको सुरुवात पनि फ्लोरेन्स नाइटेङ्गलकै अवधारणा रहेको चर्चा गरे । कलेजको स्वास्थ्य सेवामा नर्सहरुले पुर्याएको योगदानको प्रसंशा गर्दै प्रा.डा. मरहट्ठाले नर्सहरुको पेशागत हित र व्यवसायिक दक्षता अभिबृद्धिमा कलेज सदैव प्रतिबद्ध रहेको उल्लेख गरे ।

कलेजका अस्पताल निर्देशक प्रा.डा.निलमणी उपाध्यायले नर्सहरुप्रति समर्पित कविता वाचन गर्दै नर्सहरुले बिरामीको उपचार र स्याहारमा पुर्याएको योगदानको स्मरण गरे । कलेजकी मेट्रोन नविना सिंहले सरकारले नर्सिङ शिक्षाको विकास, विस्तार र प्रवर्द्धनमा काम गर्नुपर्ने बताए । विश्वभर नर्सहरूको माग भइरहेको बेला सरकारले नर्सिङ कलेज बन्द गर्दा दक्ष जनशक्ति अभाव भइरहेको जनाउँदै बन्द भएका कलेज खोल्नुपर्ने उनको धारणा थियो । मेट्रोन सिंहले नर्सिङ पेशा व्यवसायिक भन्दा पनि मानव सेवाभाव भएको बताए ।

कार्यक्रममा नेपाल मेडिकल कलेजका विगत १५ वर्षदेखि कार्यरत २९ जना नर्सहरुलाई सम्मान समेत गरिएको थियो । अन्तराष्ट्रिय नर्सिङ डेकै अवसरमा कलेजका कार्यरत नर्सहरुले आकर्षक नृत्यसँगै गीतसमेत प्रस्तुत गरेका थिए भने नाटक मार्फत नर्सिङ केयरकी जन्मदाता फ्लोरेन्स नाइटेङ्गलको जीवनी प्रस्तुत गरेका थिए । साथै, कलेजमा उपचाररत करिब २ सय बिरामीहरूलाई फलफुल समेत वितरण गरिएको छ ।

आधुनिक चिकित्सा पद्धतिमा अभूतपूर्व योगदान गर्ने फ्लोरेन्स नाइटिङ्गेलको जन्म १२ मे १८२० मा भएको थियो । उनलाई आधुनिक नर्सिङ आन्दोलनको जन्मदाता मानिन्छ । दया र सेवाकी प्रतिमूर्ति नाइटिङ्गेललाई 'द लेडी विद द ल्याम्प' (बत्ती लिएकी केटी) भनेर विश्वभर सम्मान गरिन्छ । अन्तर्राष्ट्रिय नर्स परिषद्ले यो वर्ष 'हाम्रा नर्सहरू, हाम्रा भविष्य, नर्सहरूको हेरचाहले अर्थतन्त्रलाई सुदृढ बनाउँछ' भन्ने नाराका साथ अन्तर्राष्ट्रिय नर्सिङ दिवस मनाउँदैछ ।

# माटोको भाँडोमा पकाएको खाना कतिको स्वस्थकर ?



एजेन्सी । माटोको भाँडामा खाना खानु एकदमै राम्रो मानिन्छ । माटोको भाँडामा खानेकुराको पोषक तत्त्व कति पनि नष्ट हुँदैन ।

माटोको भाँडामा खाना पकाउँदा पोषक तत्त्व मिल्छ । दूध वा दूधबाट बनेको उत्पादन राख्न र खानका लागि त माटोको भाँडा सर्वोत्तम नै हो ।

माटोको भाँडोमा खाना राख्दा फस्फोरस, क्याल्सियम, म्याग्नेसियम जस्ता खनिज शरीरमा पुग्छन् । जबकि अन्य गिलास, स्टिल वा आल्मुनियमका भाँडाहरूले त्यस्ता फाइदाहरू प्रदान गर्दैनन् । माटोमा पकाएर राखिएको खाना पेटका लागि विशेष फाइदाजनक हुन्छ । यसले ग्यास र अपचको समस्यामा आराम दिन्छ ।

माटोको भाँडोले कोलेस्ट्रोल घटाउन पनि केही हदसम्म मद्दत गर्छ । माटोको भाँडोमा बढी तेल भएको खानेकुरा राख्दा त्यसले केही हदसम्म तेल सोस्ने विज्ञहरू बताउँछन् । धेरै होइन, तर केही हदसम्म कोलेस्ट्रोलको स्तर कम हुन्छ । यसबाहेक माटोको भाँडोमा पकाइएको खानामा पनि विशेष सुगन्ध र स्वाद हुन्छ ।

यदि तपाईं माटोको भाँडो प्रयोग गर्न चाहनुहुन्छ भने, त्यसपछि तिनीहरूलाई १५ देखि २० मिनेटको लागि पानीमा भिजाउनुहोस् । त्यसपछि यसलाई पानीले सफा गर्नुहोस् र त्यसपछि मात्र प्रयोग गर्नुहोस् ।

यसले गर्दा भाँडाकुँडाले खानामा प्रयोग हुने तेल र पानी तुरुन्तै सोस्दैन। यसलाई धुन कहिल्यै साबुन प्रयोग नगर्नुहोस्। यस्ता भाँडाहरू सफा गर्न तातो पानी प्रयोग गर्नु राम्रो मानिन्छ ।

# युद्धमा सबैभन्दा पहिले सत्य मर्छ !

## भारत–पाकिस्तान तनावमा मिडियाका लागि सत्यको कुनै अर्थ छैन ?

शाहजैब अहमद

कल्पना गर्नुहोस्, कति मूर्ख हुनुपर्छ दुई आणविक शक्ति सम्पन्न देशबीच युद्धको जयजयकार गर्न । तर भारत–पाकिस्तान युद्धमा मिडिया सत्य भन्दा एक अर्काको जयजयकारमा व्यस्त देखिन्छन् ।

युद्धमा सबैभन्दा पहिला मर्ने कुरा हो- सत्य । भारतीय सञ्चारमाध्यम सत्य मार्न मात्रै सीमित छैन जस्तो देखिन्छन् । पछिल्ला केही दिनयता, युद्धमा उन्मत्त समाचार वाचक, सामाजिक सञ्जालका ट्रोल र विश्लेषकबाट उत्साहित हुँदै, सत्यलाई कुल्चन, च्याप्न, टुक्रा पार्न, जलाउन र त्यसको खरानी हिन्द महासागरमा फ्याँक्नसम्म पुगेका छन् ।

यहाँनिर ग्रीक नाटककार एस्कुलस (५२५-५२४ ई.पू.- ४५६-४५५ ई.पू.) लाई सम्झनु उचित हुन्छ । उनी सम्भवत: राज्यद्वारा फैल्याइने अफवाह र मुखमार्फत् फैलाइने प्रचारप्रति संकेत गरिरहेका थिए । त्यो समय सरल थियो- राज्यले असत्य फैलाएर पनि सजिलै उम्किन्थे । तर २१ औं शताब्दीमा, जहाँ सूचना सिमानाले बाँधिएको छैन, यस्तो झूट फैलाउन दुस्साहस चाहिन्छ ।

विकृत मेटाभर्समा

पछिल्लो २४ घण्टामा भारतीय सञ्चार प्रणालीबाट आएको झूट अचम्म लाग्दो किसिमको थियो- कतिपय त पागलपनकै स्तरको । उदाहरणका लागि भारतीय सञ्चारमाध्यमले पाकिस्तानमा बिहीबार र शुक्रबार राति यस्ता घटनाहरू भएको भन्दै प्रचार गरे ।

कराची बन्दरगाह भारतीय नौसेनाले ध्वस्त पारेको समाचार (यथार्थमा होइन) किनकि त्यहाँका छेउको रेस्टुरेन्टको दैनिकीमा कुनै फरक परेको छैन ।)

पाकिस्तानका सेनापति जनरल असीम मुनिरलाई 'कू' पछि पक्राउ गरिएको (पाकिस्तानमा कसैले थाहा नपाए पनि भारतीय सञ्चारमाध्यम निकै विश्वस्त थियो ।) भारतीय सेनाले इस्लामाबादमा हमला गरेर कब्जा गरेको र प्रधानमन्त्री शहबाज शरीफलाई सुरक्षित स्थानमा सारिएको (तर त्यो 'सुरक्षित स्थान' कहाँ छ ?)

पाकिस्तानी एफ-१६ वा जेएफ-१७ लडाकु विमान खसालिएको (भारतीय सञ्चारमाध्यमलाई पनि थाहा थिएन, कुन विमान खसाल्ने भन्नेमा अन्योलमा थिए ।)

पाकिस्तानी पाइलट पक्राउ परेको (उनीहरू अझै अभिनन्दनको सम्झनाबाट मुक्त हुन सकेका छैनन् । )

यी कुरा हास्यास्पद पनि देखिन्थ्यो, तर सँगसँगै दु:खद पनि छ । बुधवार भारतीय सेनाले पाकिस्तानमा हवाई हमला गरेपछि ३१ नागरिक मारिए, दर्जनौं घाइते भए । यता पनि क्षति भएको रिपोर्ट छन् । तर नागरिक प्राण गुमाइरहँदा भारतीय सञ्चारमाध्यम चाहिँ युद्धका डमरु बजाइरहेको छ, भाजपाको हिंसात्मक भाषणको जयजयकार गर्दै २५ करोड जनसंख्या भएको देश पाकिस्तानलाई नष्ट गर्नुपर्ने आह्वान गरिरहेको छ ।

वास्तवमा सोच्नुस्, कति अचेत मानिस हुनुपर्छ आणविक युद्धको समर्थन गर्न । तर भारतीय सञ्चारमाध्यम अझै विनाशको खतरा बढाउने काममै लागेको देखिन्छ ।

सजगता र विवेकका पक्षमा बोलौं

यदि कुनै वैकल्पिक संसारमा, जहाँ विवेकले उग्रराष्ट्रवादलाई जितेको छ भने, दुवै देशका सञ्चारमाध्यमले युद्ध भड्काउने होइन, संवादको पुल बन्ने प्रयास गर्ने थिए ।

साँचो पत्रकारिता तथ्यमा आधारित हुन्छ, कल्पनामा होइन । पत्रकारिताले सत्तालाई प्रश्न गर्छ, हिंसा बढाउन उक्साउँदैन । युद्धजस्तो संवेदनशील अवस्थामा पत्रकारिताले झूट होइन, सत्य खोज्नुपर्छ र दुवै पक्षको दृष्टिकोण ल्याउनुपर्छ- सानो गलतफहमीले ठूलो मूल्य चुकाउनुपर्ने हुन्छ ।

झूटा समाचारले जनतामा त्रास फैलाउन सक्छ, जसले प्रतिपक्षलाई हतारमा निर्णय गर्न बाध्य पार्न सक्छ- परिणाम अझ भयावह हुन्छ । साथै, आफ्नै जनतालाई सत्य सूचित गर्नु उनीहरूकै सुरक्षाका लागि अत्यावश्यक हुन्छ ।

जर्मनीको फ्रेडरिक न्याउमन फाउण्डेशनले प्रकाशित गरेको 'संघर्ष-संवेदनशील रिपोर्टिङ' पुस्तिका अनुसार, यस्ता समयमा सञ्चारमाध्यमले सहमति निर्माण, गलत कुरा सच्याउने र दुश्मनलाई पनि मानवको रूपमा चित्रण गर्ने काम गर्नुपर्छ ।

युद्धमा सूचनामा अलमल त हुन्छ नै । तर भारतीय सञ्चारमाध्यमले त यसपालि सीमा नाघेर कल्पनाका कथा नै बेच्न थालेको देखियो ।

यस्तो प्रवृत्ति नयाँ होइन । सन् २०१६ मा युरोपेली संघको 'इन्डिया क्रोनिकल्स' रिपोर्टले भारतबाट सञ्चालित फेक मिडिया र थिङ्क ट्याङ्कमार्फत् फैलाइने संगठित झूट उजागर गरिसकेको थियो ।

पछिल्ला दिनमा जुन स्तरको झूट, घृणा र युद्ध उक्साहट देखियो, त्यो ऐतिहासिक छ । सामाजिक सञ्जालका युट्युबरदेखि मुख्यधारा मिडियासम्मले भाजपा सरकारको नकारात्मकता फैल्याउने अभियानलाई बढावा मात्र दिएनन्, बरु प्रगतिशील ठानिएका कतिपयले समेत उही युद्धको डंका बजाउन थाले ।

यो सबै रेटिङका लागि ?

सायद, तर अझ बढी सम्भावना छ- अन्तर्राष्ट्रिय स्तरमा भारतीय वायुसेना (आईएएफ) का विमान खसालिएको पुष्टि भएपछि आफ्नै जनतालाई ढाँट्न गरिएको हतारो प्रयास हो । विशेषगरी राफेल लडाकु विमान (जसको खरिदमा नै भ्रष्टाचार भएको थियो) खस्नु भारतका लागि अपमानजनक थियो । रोचक कुरा, यिनै घटनाको पृष्ठभूमिमा सञ्चारमाध्यममा भ्रम फैल्याउन मिडिया सुरु भएको हो ।

सायद यो आफ्नै जनतामाथि गरिने मनोवैज्ञानिक अपरेसन हो- विजयको भ्रम सिर्जना गर्न । तर कसैले विचार गरेनन्, सत्य बाहिर आउँदा त्यो उन्मत्त जनताको प्रतिक्रिया के हुनेछ ? अनि अन्तर्राष्ट्रिय मञ्चमा भारतीय सञ्चारमाध्यमको विश्वसनीयता कति गिर्छ ?

अहिले समाचार आइरहेको छ कि सरकारले 'द वायर' नामक वेबसाइटमा प्रतिबन्ध लगाएको छ (जुन केही थोरै संस्थामा पर्दछ, जसले राज्यको आधिकारिक कथालाई प्रश्न गरिरहेको थियो ।)

'द वायर' ले घृणा होइन, तथ्यको खोजी गरिरहेको थियो । अब समय आएको छ कि भारतीय पत्रकारले बुझ्नुपर्छ-जपाको प्रचार यन्त्र बनेर सीमापारका जनतामाथि घृणा उछालेर लामो समय टिक्न सकिँदैन । पत्रकारिता सत्य र साहसमा अडिएको हुन्छ । त्यसो हुन नसके पत्रकार एउटा केवल कलम धारण गर्ने कर्मचारी मात्र हुन्छ ।

(शाहजैब अहमद कराँचीस्थित आईबीए (इन्स्टिच्युट अफ बिजनेस एडमिनिस्ट्रेसन) मा प्राध्यापक हुन् । उनी डनडटकममा सम्पादकीय सल्लाहकारको रूपमा कार्यरत छन् ।)

## गोदावरीमा जैविक प्रविधि मार्फत पहिरो नियन्त्रणको सुरुवात



ललितपुर । ललितपुर जिल्लाको गोदावरी नगरपालिकाले जैविक प्रविधि मार्फत पहिरो नियन्त्रणको कार्यलाई अगाडि बढाएको छ । गोदावरी नगरपालिकाको वडा नं २ स्थित किटाचौर, बिष्टछापमा रहेको जोखिम युक्त पहिरोमा भेटिभर बिरुवा रोपण गरी नगरप्रमुख गजेन्द्र महर्जनले उक्त कार्यको शुभारम्भ गरेको हो ।

उक्त कार्यक्रममा गोदावरी नगरपालिका वडा नं. २ का वडा अध्यक्ष मनोहर सिलवाल, कार्यपालिका सदस्य रीता पुकुटी मिजार, वडा सदस्य रमेश बिष्ट, कर्ण तामाङ, शोभा बानिया बुढाथोकी, वडा सचिव रोशन कुमार झा, फोकल पर्सन किरण बज्राचार्य, वडाका पुर्व वडा अध्यक्ष, विद्यालयका शिक्षक, शिक्षिका, समाजसेवी, बुद्धिजीविहरुको सहभागिता रहेको थियो ।

कार्यक्रममा मेयर महर्जनले प्राकृतिक विपद बाढी पहिरो जस्ता समस्याको प्राकृतिक रुपमै समाधान गर्न यस प्रकारको प्रविधि अन्तराष्ट्रिय स्तरमा प्रभावकारी देखिएको बताए । उनले यस स्थानमा जैविक प्रविधि मार्फत गरिएको पहिरो रोकथाम प्रभावकारी देखिएकोले पालिकाको अन्य क्षेत्रमा समेत यसको प्रयोग बिस्तार गरिदै जाने प्रतिबद्धता व्यक्त गरे ।

वडा नं २ का वडा अध्यक्ष सिलवालले भेटिभर प्रविधि सयुक्त राष्ट्रसँघले सन् २०२० देखि २०३० को दशकलाई पारिस्थितिकी प्रणाली पुन स्थापनाको दशकको रुपमा घोषणा गरेको र पारिस्थितिकी प्रणाली पुन स्थापनामा भेटिभर बनस्पतिको धेरै ठुलो महत्वर योगदान रहेको कुरा बताए ।

उनले गोदावरी नगरपालिकाले बातावरण संरक्षणको क्षेत्रमा धेरै महत्वपूर्ण कार्यगर्दै आएको उल्लेख गर्दै पालिका हरित पुर्वाधार तर्फ अग्रसर रहेको जानकारी दिए । उनले हरित पुर्वाधारको कार्यसँग नेपालको पहिलो कार्वन नेगेटिभ पालिकाको रुपमा गोदावरी नगरपालिका स्थापित हुन सक्ने विचार व्यक्त गरे । गोदावरी नगरपालिकाले भेटिभर नेपालको प्राविधिक सहयोगमा स्याम्पल प्रोजेक्टको रुपमा उक्त पहिरो नियन्त्रणको कार्यको शुभारम्भ गरेको हो । काठमाडौं उपत्यकामा पछिल्लो समय पहिरोको प्रकोप बढ्दै गएको छ । अघिल्लो वर्षको अत्याधिक बर्षाका कारण ललितपुर, काभ्रे, सिन्धुली, सिन्धुपाल्चोक क्षेत्रमा बाढी तथा पहिरोले निकै ठुलो धनजनको क्षति भएको थियो ।

## प्लानिङ ब्वाइज ए डिभिजनमा बढुवा

काठमाडौं । प्लानिङ ब्वाइज युनाइटेड २ खेल अगावै 'ए' डिभिजनमा उक्लन सफल भएको छ । बाँसबारी क्लबलाई २-० ले हराउँदै प्लानिङ ब्वाइज शीर्ष डिभिजनमा उक्लिएको हो । यो जितमा प्लानिङ ब्वाइजले ११ खेलबाट २७ अंक बनाएर २ खेल अगावै शीर्ष दुईमा रहने निश्चित भएको हो ।

एन्फा कम्प्लेक्समा भएको खेलमा प्लानिङ ब्वाइज पहिलो हाफ गोल रहित बराबरीमा सकियो । खेलको ४७ औं मिनेटमा लङ पासमा बाँसबारीका गोल किपर सन्दीप राउतको गल्तीमा आत्मघाती गोल भयो । उनको टाउकोमा लाग्दै गोलमा परिणत भयो । आत्मघाती गोल उपहार पाएपछि प्लानिङ ब्वाइजले १-० को अग्रता बनायो ।

खेलको ८२ औं मिनेटमा पुजन थापाले गोल गरे । यो गोलमा प्लानिङ ब्वाइज २-० को जित दर्ज गर्न सफल रहयो । यो सँगै ए डिभिजनमा उक्लन सफल भयो । सन् २०२२ मा बी डिभिजनमा उक्लिएको तीन वर्षको छोटो अवधिमा बीबाट प्लानिङ ब्वाइज ए डिभिजनमा उक्लन सफल भएको हो । ए डिभिजनमा २ वटा क्लब उक्लने छन् । १० खेल खेलेको श्री भगवतीसँग २२ अंक छ । अब उसले बाँकी तीन खेलमा ३ अंक बनाएको खण्डमा ए डिभिजनमा उक्लने छ । बाँकी अन्य क्लबले भने बाकी खेलहरूबाट २७ अंक जोड्न सक्दैन । यही कारण प्लानिङ ब्वाइजले ए डिभिजनमा स्थान पक्का गरेको हो ।

## एन्सेलोट्टी ब्राजिलियन फुटबल टोलीको नयाँ प्रशिक्षक



एजेन्सी । रियल म्याड्रिडका प्रशिक्षक कार्लो एन्सेलोट्टी यो सिजनको अन्त्यमा स्पेनी क्लब छाडेर ब्राजिलियन राष्ट्रिय टोलीको नयाँ प्रशिक्षक बन्ने भएका छन् । ६५ वर्षीय इटालियन प्रशिक्षकले ला लिगा सिजनको समाप्तिपछि मे २६ मा ब्राजिलको जिम्मेवारी आधिकारिक रुपमा सम्हाल्ने बताइएको छ ।

उनी स्यान्टियागो बर्नाबेउ क्लबका सबैभन्दा सफल प्रशिक्षकहरूमध्ये एकका रुपमा क्लब छाड्दै छन् । एन्सेलोट्टीले दुई कार्यकालमा रियलको प्रशिक्षकका रूपमा १५ उपाधि जितेका छन् । गएको सिजन उनले रियललाई च्याम्पियन्स लिग र ला लिगा दुवै जिताएका थिए ।

तर, आइतबारको 'एल क्लासिको' पराजयपछि रियल शीर्ष स्थानमा रहेको बार्सिलोनाभन्दा ७ अंकले पछि परेपछि उनको बिदाइ पक्का जस्तै देखिएको थियो । ला लिगामा यो सिजन ३ खेल मात्र बाँकी छन् ।

बार्सिलोनाले अत्यन्तै खराब प्रदर्शन नगरेसम्म, यो नतिजाले रियल ४ वर्षमा पहिलो पटक उपाधिविहीन सिजन समाप्त गर्ने लगभग निश्चित देखिन्छ । ब्राजिलियन फुटबल कन्फेडेरेसन (सिबिएफ ) को विज्ञप्तिमा एन्सेलोट्टीलाई खेलको एक महान व्यक्ति भनेर वर्णन गरेको छ । टिमको जिम्मेवारी एक विदेशी प्रशिक्षकलाई दिनु ऐतिहासिक कदम भएको पनि बताएको छ ।

५ पटकको फिफा विश्वकप विजेता ब्राजिल टोली र युरोपका ठूला प्रतियोगितामा अद्वितीय कीर्तिमान बनाएका प्रशिक्षकबीचको मिलनलाई सिबिएफले एतिहासिक क्षण रहेको बताएको छ। विज्ञप्तिमा भनिएको छ, 'सिबिएफ एन्सेलोट्टीलाई हार्दिक स्वागत गर्दछ र उनको नेतृत्वमा नयाँ सफलताको युग प्रारम्भ हुने आशा राख्दछ ।'

सिबिएफले प्रशिक्षकको अनुबन्ध अवधि समाप्त हुनु अघि नै सहजीकरण गरेकोमा रियलका अध्यक्ष फ्लोरेन्टिनो पेरेजलाई धन्यवाद पनि दिएको छ । एन्सेलोट्टीको हालको सम्झौता सन् २०२६ को जुनमा समाप्त हुने तय भएको थियो ।

## आइपिएल यसै साता पुन: सुरु हुने

एजेन्सी । विराट कोहली सम्मिलित रोयल च्यालेन्जर्स बैंगलुरु (आरसीबी) र कोलकाता नाइट राइडरबीचको खेलसँगै आइपिएल २०२५ को पुन: सुरु हुने भएको छ । इन्डियन प्रिमियर लिग (आइपिएल) को खेल शनिवार (मे १७) सुरु हुने भारतीय क्रिकेट नियन्त्रण बोर्ड (बिआइसिसी) ले जनाएको छ । बिआइसिसीले सोमवार परिमार्जित तालिका सार्वजनिक गर्दै फाइनल जेठ २० (जुन ३) गते हुने जनाएको छ ।

यसअघि, भारत र पाकिस्तानबीचको बढ्दो तनावका कारण गत हप्ता आइपिएल २०२५ सिजन स्थगित गरिएको थियो । शनिवार युद्धविरामको घोषणा भएपछि प्रतियोगिता पुन: सुरु हुने बाटो खुलेको हो । क्वालिफायर १ जेठ १५ गते (मे २९) र इलिमिनेटर जेठ १६ गते (मे ३०) मा हुनेछ । त्यस्तै क्वालिफायर २ जेठ १८ गते (जुन १) हुनेछ ।

प्लेअफ खेलहरुको स्थान अझै घोषणा गरिएको छैन । आधिकारिक विज्ञप्तिमा भनिएको छ, 'प्लेअफ खेलहरुको स्थलबारे विवरण पछि सार्वजनिक गरिनेछ ।' लिग चरणको खेल जेठ १३ गते (मे २७) लखनऊ सुपर जाइन्ट्स र आरसीबी बीच एकाना स्टेडियममा हुनेछ । संशोधित पहिलो डबल हेडर (एकै दिन दुई खेल) आइतवार (मे १८) हुनेछ ।

दिउँसोको खेल राजस्थान रोयल्स र पञ्जाब किंग्स बीच जयपुरमा

साँझको खेल दिल्ली क्यापिटल्स र गुजरात टाइटन्स बीच दिल्लीमा

## आम....

आफूले अब आउने मंसीरमा सरकारको नेतृत्व देउवालाई सुम्पने अभिव्यक्ति दिएर उम्कने गरेको छन् भने देउवाको मौनताले कांग्रेसको लागि सरकार विरोधी मत बढ्दै गइरहेको छ । आम जनतामासमेत कांग्रेस प्रतिको विश्वास घट्दै गइरहेको अवस्था छ ।

यही अवस्थाको आंकलन गरेर नै नेता शेखर कोइरालाले शनिबार थारु संघको अधिवेशनलाई सम्बोधन गर्दै सरकारलाई पनि चलाउने गरी राजनीतिक संयन्त्र बनाइएको भन्दै त्यसलाई तोड्न आग्रह गरे । शेखरले सरकारको प्रत्यक्ष विरोध नगरे पनि प्रतिस्पर्धी एमालेसँगको सहकार्यले पार्टी नबन्ने बताए । अजले 'हाम्रो प्रतिस्पर्धी पार्टी एमाले हो । ऊसँगै सहकार्य गरेर संगठन बन्दैन । गलतलाई गलत नभनी हामी अगाडि बढ्न सक्दैनौं,' शेखरले भनेका थिए, ' अर्कातिर सत्तारुढ कांग्रेस र एमालेले सरकारबाहिरबाट संयन्त्र बनाएका छन् । लोकतान्त्रिक मुलुकमा संयन्त्रले सरकार चलाउने अभ्यास हुँदैन ।' यसैले तल्लो तहसम्म बनाइएको यस्तो संयन्त्र खारेज गर्नुपर्ने मत शेखरले राखे ।

केन्द्रीय सरकारलाई सहजीकरण गर्ने उच्चस्तरीय राजनीतिक संयन्त्रमा बसेका महामन्त्री गगन थापा अहिले निष्क्रिय भइरहेका बेला शेखरले यस्तो बोलेका हुन् । महामन्त्री थापा पनि सरकारको कामलाई लिएर निकै असन्तुष्ट छन् । आफूहरूमा भएको जति छटपटाहट सरकारमा बसेकाहरूमा नभएको भन्दै थापाले प्रश्नैप्रश्नले गठबन्धन घेरिएको बताएका छन् । केही समय अगाडिसम्म थापाले सभापति र प्रधानमन्त्रीसँग ट्युनिङ मिलाएर काम गरेका थिए । तर, अहिले दुवैसँग पर्याप्त छलफल नगरी राजनीतिक संयन्त्रको बैठकमा समेत नजाने अडान लिएर बसेका छन् ।

'प्रचण्डपछि ओली नेतृत्वको सरकारलाई सफल बनाउन महामन्त्रीले सबै प्रयत्न लगाउनुभयो। तर, दुवै सरकारबाट अपेक्षित नतिजा नआएपछि नागरिकका प्रश्नले आफूलाई पनि लखेटेको महामन्त्रीको बुझाइ छ,' उनीनिकट स्रोतले भन्यो, 'यसैले प्रधानमन्त्रीको कामगराइसँग असन्तुष्ट देखिँदा उहाँको सम्बन्ध सभापतिसँग पनि बिग्रेकोजस्तो देखिन्छ ।'

सरकारमा बसेर नागरिकमा उत्साह जगाउन नसकिएको, अर्थतन्त्रलाई लयमा ल्याउने काम नभएको, संविधान संशोधनको काम नै नथालिएको भन्दै उनीहरूले पार्टी नेतृत्वलाई नै रक्षात्मक बनाउने अभिव्यक्ति दिइरहेका छन् । शिक्षक आन्दोलनलाई सम्बोधन गर्न एक महिना लगाएको, गभर्नर नियुक्तिमा किचलो बढेको भन्दै कांग्रेस नेताहरूले देउवामाथि दबाब बढाएका हुन् । गभर्नर नियुक्ति प्रक्रिया छिट्टै नटुंग्याए सरकारले थप दबाबको सामना गर्नुपर्ने स्थिति आउने नेताहरू बताउँछन् ।

पार्टीभित्रैबाटै दबाब बढ्न र सरकारको विरोध धेरै हुन थालेपछि कांग्रेस संसदीय दलको बैठकले शनिबार सरकारको नीति कार्यक्रमको पक्षमा खुलेर बोल्न निर्देशन नै दिनुपरेको थियो । 'नीति कार्यक्रममा धेरै कुरा समेटिएका छन् । राष्ट्रिय आवश्यकताका सकारात्मक र रचनात्मक विषय छन् । यसैले सुझावसहित कार्यक्रमको पक्षमा बोल्ने र प्रस्तुत हुने निर्णय भएको छ,' बैठकपछि प्रमुख सचेतक श्याम घिमिरेले भनेका थिए, 'नीति कार्यक्रमलाई बजेटमार्फत कार्यान्वयनमा लाँदा नागरिकका अपेक्षा पूरा गर्नुपर्छ । विधेयक निर्माणमा सुस्तता छायो । यसैले संसद् र समितिमा कांग्रेसले निर्णायक भूमिका खेल्नुपर्छ भन्ने निष्कर्ष निकालेका छौं ।'

तर, संसदीय दलको बैठकमा सांसदहरूले गठबन्धन सरकारको अभ्यास प्रधानमन्त्रीले नगरेको र यसमा पार्टी सभापतिले कुनै कदम नचालेको भन्दै आलोचना गरे । 'सबैभन्दा ठूलो पार्टी कांग्रेस सरकारमा छ । तर, शिक्षकले २९ दिन आन्दोलन गरेपछि बल्ल माग सम्बोधन हुने स्थिति बन्यो । गभर्नर नियुक्तिको प्रक्रिया उस्तै गरी अल्झाउने काम भएको छ । अरू नियुक्तिमा पनि कांग्रेस साक्षी बस्ने र प्रधानमन्त्रीले एकल निर्णय गर्ने स्थिति देखिएकोबारे सांसदहरूले कुरा उठाउनुभयो,' सांसद प्रतिमा गौतमले भनिन्, 'यसैले सरकारमा हुँदा यसलाई रचनात्मक बनाउन कांग्रेसले पर्याप्त छलफल र संवाद गरेर निकास निकाल्नुपर्छ, नागरिकलाई आशावादी बनाउनुपर्छ भन्ने धेरै सांसदको जोड थियो ।'

समर्थन र सपोर्ट गर्नुपर्ने नेता नै असहयोगी देखिएपछि देउवाले पनि केही दबाब महसुस गरेका छन् । पछिल्लो समय अरू नेताले वास्ता गर्न छाडेपछि सभापति देउवा, उपसभापति पूर्णबहादुर खड्का, परराष्ट्रमन्त्री आरजु राणा र गृहमन्त्री रमेश लेखकमात्रै सत्तारुढ दलकोजस्तो देखिएका छन् । उनीहरू मात्रै प्रधानमन्त्रीले बोलाएको छलफलमा जाने गरेका छन् । देउवा टीमकै नेताले समेत सरकारको प्रतिरक्षा गरिरहेका छैनन् ।

गभर्नरसहितका नियुक्तिको विषय सहजै नटुंगिँदा कांग्रेस सभापति देउवाले समेत खुलेर सरकारको बचाउ गरिरहेका छैनन् । यसअघि हरेकजसो कार्यक्रममा देउवाले 'सत्ता समीकरण केही हुँदैन, ओलीजीप्रति विश्वास छ' भन्न छुटाउने गरेका थिएनन् ।

तर, थाइल्यान्डबाट फर्किएपछि सरकारबारे छोटो प्रतिक्रिया दिएयता देउवासमेत सरकारको विषयमा बोलेका छैनन्। पछिल्लो केही दिनयता देउवा पार्टीले राखेका थुप्रै कार्यक्रममा गएका छन् । तर, जुन विषयको कार्यक्रम हो त्यही विषयमा मात्रै अभिव्यक्ति दिइरहेका छन् । सरकार र समीकरणबारे देउवाले समेत सार्वजनिकरूपमा अस्वाभाविक मौनता साँधेका छन् । यसले भने सत्ता सहयात्री दल एमालेलाई झस्काएको छ ।

सभापति देउवानिकटका नेता ज्ञानेन्द्रबहादुर कार्की केहीले सांकेतिक विरोध गरे पनि सभापति दबाबमा नरहेको बताउँछन् । 'कांग्रेस प्रजातान्त्रिक पार्टी हो, यहाँ बोल्न कुनै कुरा पनि वर्जित छैन । बलियो सरकार भएकाले जनताको धेरै अपेक्षा हुने, तर काम कम हुँदा असन्तुष्टि बढ्नु स्वाभाविक नै हो,' कार्कीले भने, 'यो सरकारको ठाउँमा अर्को भएको थियो भने पनि हुने यस्तै हो । यसैले नेतृत्वलाई मात्रै लखेट्ने शैलीले हामी रचनात्मक बन्दैनौं । केही नेताको विरोधलाई संस्थागत विरोध भनेर सामान्यीकरण गर्नुहुँदैन ।'

## मध्यपुर...

भूमिका निभाएका थिए । कुमारी मन्दिर परिसरमा पुगेर टोलीमा सहभागी चित्रकारहरूले थिमिको सांस्कृतिक दृश्यलाई क्यानभासमा उतारेका थिए भने साहित्यकारहरूले कविता कोरेका थिए ।

जेसुम यात्राकी परिकल्पनाकार एवं संयोजक कवि तथा बुढानिलकण्ठ नगरपालिकाकी नगर उपप्रमुख अनिता लामाले भनिन्, "थिमिको भित्री स्वरूप हेर्दा लाग्छ, कुनै ऐतिहासिक कालखण्डमा पाइला टेकेको छु ।" लामाले बौद्ध र नेवार सभ्यताको समिश्रणमा कविता लेखेकी थिइन् । उनले जेसुम यात्रालाई सामाजिक उत्तरदायित्वको रूपमा लिएकी बताइन् ।

प्रेस काउन्सिल नेपालका अध्यक्ष तथा जेसुम यात्राका संस्थापक बालकृष्ण बस्नेतले पनि थिमिको सम्पदाबाट प्रभावित भएर कविता कोरे । उनलाई पछ्याउँदै स्नेह सायमी, रामगोपाल आशुतोष, अस्मिता मानन्धर, फूलमान वल, घनश्याम खड्का, दिपेन्द्र बनेपाली, रजनी मिला, ज्ञानराम श्रेष्ठ, बुद्धिकृष्ण वागः श्रेष्ठलगायतले आफ्ना सिर्जनाको वाचन गरेका थिए ।

चित्रकार चन्द्रा श्रेष्ठले मन्दिरलाई पृष्ठभूमिमा राखेर चित्र कोरे भने दिपेन्द्रमान बनेपालीले कवि स्नेह सायमीको 'चश्मा र आँखा' कवितालाई दृश्यात्मक रूपमा उतारे । मिथिला चित्रकार सरितादेवी मण्डलले थिमिको जनजीवन र कृषि परम्परालाई मिथिला शैलीमा चित्रित गरिन् ।

निवर्तमान नगरप्रमुद श्रेष्ठले जेसुम यात्राको बारेमा धेरैपटक सुनेको बताउँदै, आज साक्षात् सहभागी हुन पाएकोमा यो अभियान साँच्चै प्रेरणादायी भएको विचार व्यक्त गरे । उनले सो दिनको सबै सिर्जनाहरूलाई समेटेर पुस्तकको आकारमा प्रकाशन गर्ने तयारीमा रहेको पनि जानकारी दिए ।

जेसुम यात्राका संस्थापक बस्नेतका अनुसार यो अभियान काभ्रेको धुलिखेलस्थित हजार सिँढीबाट सुरु भएर नगरकोट, धनकुटा, बुढानीलकण्ठ, चन्द्रागिरी, अनन्त लिंगेश्वर हुँदै थिमि आइपुगेको जानकारी दिए । उनले सांस्कृतिक पुनर्जागरण र सकारात्मकताको सन्देश बोकेको यो अभियान नेपाली राष्ट्रिय संस्कृति निर्माणतर्फको महत्त्वपूर्ण पाइला रहेको पनि बताए । यात्रामा लक्ष्मी माली, शशी लुमुम्बु, अनन्त वाग्ले, जयन्ती स्पन्दन, कल्पना श्रेष्ठ, नन्दु उप्रेती, सुन्दर शिल्पकार, रामदत्त मिश्र, डम्बर मिश्र, संगीतकार अशोक राई, वसन्त मुकारुङलगायतका स्रष्टाहरू सहभागी थिए ।

## बुद्ध....

जात्रा सुरु भएको थियो । जात्रा सोमबार दिनभर धुमधामकासाथ मनाइएको थियो । चासुखेलस्थित चण्डेश्वरी देवीको तीनतल्ले मन्दिर वरपर जात्रा सञ्चालन हुन्छ ।

जात्राको क्रममा सोमबार विहानदेखि चण्डेश्वरी मन्दिरमा मेला लागेको थियो । त्यसक्रममा त्यहाँ बलीसहित पुजाआजा गरिएको थियो । टोलका घरपरिवारले कसैले बोका त कसैले कुखुराको बली चढाएका थिए । त्यस क्रममा छोरीबेटी बुहारीले भाकल अनुसार फरिया चण्डेश्वरी देवीमा चढाउने परम्परा पनि रहिआएको छ ।

जात्राको क्रममा साँझपख चण्डेश्वरी देवीलाई खटमा विराजमान गर्नु अगावै रित्तो खटको जात्रा गर्ने चलन छ । त्यसपछि देवीलाई खटमा विराजमान गराई बाजागाजाका साथ ठूलो लावालश्करसहितको जात्रा हुने गर्दछ । जात्रा चण्डेश्वरी उकालो हुदै टिबुक्छे, साकोथाबाट पुगेको थियो ।

सरकारी पुजा सकेपछि चण्डेश्वरी देवी पुनः सोही बाटो फिर्ता भई टिबुक्छे टोल पुग्ने प्रचलन छ । तत्पश्चाात चण्डेश्वरी देवीको खट सुकुलढोका, गोल्मढी, इनाचो हुदै तचपाल टोल नपुग्दै आउने चौवाटोमा रोकिने परम्परा छ । यस क्रममा खटलाई नबोकी भुईमा घिसार्दै जात्रा गर्ने परम्परा छ । जुन नेपालको कुनै पनि ठाउँमा यस प्रकारको प्रचलन नभएको बताइन्छ । त्यसपछि खटलाई पुनः बोकी गोल्मढी, याता, गलसा पुखु हुदै क्वाछे ओरालोसम्म जात्रा गरिन्छ । पुनः खट फकाई चण्डेश्वरी मन्दिर परिसरको दबलीमा पुऱ्याएपछि खटबाट मूर्ति निकाली पुजा हुन्छ। मूर्तिलाई पेटीमा विराजमान गराई भक्तजनबाट पूजा गरिन्छ। यही साँझ चण्डेश्वरी देवीको फूलप्रसाद पुऱ्याएपछि मात्र बनेपाको चण्डेश्वरीको जात्रा सुरु हुने परम्परा रहेको छ ।

चण्डेश्वरीको यो जात्रा स्थानीयहरु देशकै ठूलो चाँडपर्व दसैं, तिहार, नयाँ वर्ष भन्दा वढी धूमधामका साथ मनाउँछन् । यस क्रममा छोरी ज्वाईलाई पनि भोज बोलाएर भोज खाने गर्छन्, जुन परम्परा दशै, नयाँ वर्षमा मात्रै हुन्छ । यस अनुसार सोमबार साँझ चण्डेश्वरीको मूर्ति द्यःछे (देवताघर) बाट निकालिएको थियो । पुजाआजाका साथ सिंगारिएको खटमा आरोहण गराइएको थियो । जात्राको क्रममा टिप्वा (निगालोको मुट्ठा) बालेको थियो। यस दिनको जात्रा विशेषगरी मन्दिर अगाडिको उकालो अर्थात चासु ख्यःउकालोसम्म हुन्छ ।

जात्राको क्रममा ठाउँठाउँमा सिलाचा छवयेके भनी आगो धुनी बालिएको थियो । जात्रा सकेपछि चण्डेश्वरीको मूर्तिलाई मन्दिर परिसरमा राखी विभिन्न गुथीबाट गुथीपुजा गरी टोलबासीवीच भोजभतेर गरिएको थियो । जात्राको शुरुवात कसले कहिलेदेखि गरेको हो कुनै विस्तृत अध्ययन भएको नपाइएको इतिहासविद्हरु बताउँछन् । मन्दिरसँग सम्बन्धित केही ठोस प्रमाणमा नेपाल सम्बत ८४८ जेष्ठ कृष्ण त्रयोदशीको दिन तत्कालिन भक्तपुरका राजा रणजीत मल्लको समयमा टिबुक्छे टोलका पञ्च समुदाय मिली मन्दिरमा सुनको छाना छाएको उल्लेख छ । त्यस्तै नेपाल सम्बत ८६५ मा चण्डेश्वरी देवी समिप पार्टी बनाएको अर्को एउटा प्रमाण मौजुद छ । यसबाट भक्तपुरको चण्डेश्वरी देवीको मन्दिरको स्थापना एवम जात्रा रणजीत मल्लको समयमा मात्र भएको हो कि भन्ने अनुमान गर्न सकिने इतिहासविदहरु बताउँछन् ।

## सामाजिक....

प्रविधि तथा गुण नियन्त्रण विभागले भक्तपुरको विभिन्न स्थानमा उत्पादन हुने मौलिक उत्पादन जुजु धौ गुणस्तरीय रहेको प्रष्ट पारेको छ ।

विभागले विज्ञप्ति जारी गर्दै गहन रुपमा गरिएको परीक्षणको क्रममा जुजु धौमा कुनै पनि प्रकारको बाह्य पदार्थ वा अखाद्य पदार्थ समिश्रण नभएको पाइएको जानकारी दिएको छ ।

केही समय यतादेखि विभिन्न सामाजिक सञ्जालमार्फत केहि समूहले जुजु धौ दहीमा टिस्यु पेपर, कागज, पानीमा नघुल्ने पदार्थहरु समिश्रण गरेको भन्दै भ्रम छर्ने गतिविधि भइरहेको जनाउँदै विभागले त्यस्तो भ्रमको पछि नलाग्न र भ्रमसमेत नछर्न आग्रह गरेको छ ।

विभाग, जिल्ला प्रशासन कार्यालय भक्तपुर, भक्तपुर नगरपालिका, पत्रकार महासंघका प्रतिनिधिसहितको संयुक्त अनुगमन टोलीले भक्तपुर नगरपालिका वडा नम्बर २ ब्यासीस्थित लक्ष्मी दही भण्डार, सैंजु दुग्ध उद्योग लगायतका डेरी तथा जुजुधौ उत्पादन तथा विक्री वितरण गर्ने उद्योगहरुको निरीक्षण तथा अनुगमन गरेको थियो ।

'अनुगमनको क्रममा अनुगमन टोलीले स्थलगत रुपमै दहीमा अखाद्य वस्तुहरु टिस्यु पेपर, कागज, पानीमा नघुल्ने पदार्थहरु मिसिएको वा नमिसिएको परिक्षण गरिएको थियो,' विभागका वरिष्ठ अनुसन्धान अधिकृत सुमन धितालले भने, 'स्थलगत परिक्षणवाट उत्पादन भएका जुजु धौ दहीमा सामाजिक संजालमा भ्रम छरिएको जस्तो टिस्यु पेपर, कागज, पानीमा नघुल्ने पदार्थलगायतका कुनै पनि प्रकारको कैफियत भेटिएको छैन ।'

अनुगमन टोलीले दही उद्योगहरुको उत्पादन स्थल, विक्री वितरण कक्ष, विक्री वितरणको लागि तयारी अवस्थामा रहेका जुजु धौका उत्पादनको लागि आवश्यक पर्ने कच्चा पदार्थहरुको समेत अध्ययन गरेको थियो । अध्ययनको क्रममा कुनै पनि प्रकारको कैफियत नभेटिएको विभागको भनाई छ ।

भ्रामक तथा तथ्यहिन भिडियोहरु सामाजिक सञ्जालमा पोस्ट गर्दा उद्योगलाई नकारात्मक असर पुर्याउनुका साथै राष्ट्रिय अर्थतन्त्रमा समेत प्रतिकुल प्रभाव पर्ने भएकाले सामाजिक सञ्जाल प्रयोगकर्ताहरुले सजग र सचेत हुनुपर्ने विभागले जनाएको छ।

## नेवाःहरुको....

शहरीकरणको मापदण्ड र किराँतकाल, लिच्छिविकालमा उपत्यकामा विकसित बस्ती र शहरीको तुलना गर्दै बस्तीको विशेषता, त्यहाँभित्रको सामुहिकता, आर्थिक प्रणाली र पर्यावरणको दृष्टिकोण सहित विश्लेषण प्रस्तुत गरे । त्यसैगरी आर्किटेक्ट सिर्जना प्रजापति र गणेशभक्त शिल्पकारले काठमाडौं उपत्यकामा विकसित परम्परा तथा मौलिक घर निर्माणको प्राविधिक पक्षको विवेचना गरेको थियो ।

काठ र माटोले बनाएको घर १९९० सालको भूकम्प र २०७२ सालको भूकम्पले नलडेको कारणसहित र त्यसमा प्रयोग गरिएको प्रविधिबारे उनीहरुको प्रस्तुति रहेको थियो । त्यस्तै वनस्पती विज्ञ डा. निर्मला जोशी र कृषिविज्ञ बुद्धिरत्न डंगोलले काठमाडौं उपत्यकामा प्रचलित खेती प्रणालीको वैज्ञानिकता र त्यससँग जोडिएको संस्कृति र संस्कारबारे कार्यपत्र प्रस्तुत गरेको थियो ।

ती कार्यपत्र प्रस्तुत गर्ने क्रममा हराइसकेका कपिपय प्रविधि र त्यसको नाम विभिन्न व्यक्तिहरुसँग अन्तरवार्ता, कुराकानीमार्फत संकलन गरिएको थियो । नेवाः ज्ञान र सीपको अभिलेखीकरणको यो पहिलो प्रयास रहेको एकेडमीले जनाएको छ । एकेडमीका अनुसार दोस्रो चरणमा धातुकला, काष्ठकला लगायतका प्रविधिबारे छलफल गराइने छ । त्यसपछि काष्ठकला, परम्परागत रुपमा घर बनाउने प्रविधि, नेवाः बस्ती र शहरीकरणको प्रविधि, धातुकला, सुकुल बुन्ने, सुनचाँदीको गरगहना बनाउने लगायतका ज्ञान, सीप र प्रविधिको अभिलेखीकरण कार्य गरिने बताइएको छ । नेवाः समुदायमा प्रचलित धातुकला, हात र खुट्टा दुखेमा परम्परागत रुपमा मसाज गर्ने प्रविधिलगायत विषयमा क्रमशः सम्मेलन गर्दै जाने पनि एकाडेमीको योजना रहेको छ ।

'सार्वजनिक वृत्तमा नेवाः समुदायलाई चिनाउँदा संस्कृति, सम्पदा, भाषा कला र लिपिको हिसाबले मात्र चर्चा हुने गर्ने गरेको स्थिति छ । यसरी चिनाउने र चर्चा गर्ने कार्यले समुदायको परिचय भने पूर्ण रुपमा समेटिएको छैन । यहाँभित्र धेरै ज्ञान, सीप र प्रविधि छ । जुन अद्यापि अभ्यासमा छन् र कतिपय हराइसकेका छन् । त्यसको खोज गरी अभिलेखीकरण गर्नुपर्ने खाँचो छ' -एकेडमीका चान्सलर मल्ल के सुन्दरले भने ।

गोष्ठीको उद्घाटन उपप्रधान तथा शहरी विकास मन्त्री प्रकाशमान सिंहले गरेको थियो । उद्घाटन सत्रलाई सम्बोधन गर्दै उनले नेवाः सभ्यतालाई संरक्षण गर्न सरकार लाग्ने प्रतिबद्धता व्यक्त गरे । काठमाडौं महानगरपालिकाका उपमेयर सुनीता डंगोलले नेवाः समुदायमा प्रचलित ज्ञान र सीपको पुस्तान्तरणको खाँचो रहेको औंल्याए । नेवाः समुदाय विशेषतः भाषा लिपि कला, साहित्य, संस्कृति र सम्पदालाई केन्द्रविन्दु बनाएर मात्र कार्यक्रम गर्दै आएकोमा यसपटक प्रविधिलाई लिएर गरिएको सो गोष्ठीलाई नौलो रुपमा हेरिएको थियो ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com

थिमि TIMES

# 'जनै हराएको बाहुन'को छायांकन ३५ दिनमा सम्पन्न

काठमाडौं । चलचित्र 'जनै हराएको बाहुन : सम्बन्धका धागाहरू'को छायांकन सकिएको छ । निर्माणपक्षले सोमबार ललितपुरको च्यासलस्थित एक पार्टी प्यालेसमा भव्य इन्डक्ल्याप पार्टीको आयोजना गर्दै ३५ दिनमा छायांकन सम्पन्न भएको जानकारी गराएको हो ।

निर्माणपक्षले उक्त इन्डक्ल्याप पार्टीमा चलचित्रको सम्पूर्ण छायांकन ३५ दिनमा सम्पन्न भएको जानकारी गराएको छ । यो चलचित्र छायांकन काठमाडौं, ललितपुर, भक्तपुर र काभ्रेमा भएको निर्माणपक्षले जानकारी दिएको छ । "सिनेमा अपेक्षा गरेअनुसार नै राम्रोसँग छायांकन गरिएको छ," निर्देशक हिमाल न्यौपानेले भने, "अब पोस्ट प्रोडक्सनमा पनि हामी मेहनत गरेर दर्शकलाई राम्रो सिनेमा दिनेछौं ।"

सिनेमालाई हिमाल न्यौपानेको निर्देशन गरेका छन् । निर्देशक न्यौपानेको यो डेब्यु निर्देशन हो । 'जनै हराएको बाहुन : सम्बन्धका धागाहरू'ले गाउँदेखि सहर आएका एक सरल व्यक्तिले भोग्नुपरेका अनपेक्षित परिस्थिति र त्यसले उनको जीवनमा ल्याएको परिवर्तनलाई केन्द्रमा राखेको छ । चलचित्रले आमा र छोराबीचको भावनात्मक कथा भन्नेछ ।

चलचित्रका असोसियट निर्देशकमा 'प्रेमगीत ३' अभिनेता मनिष राउत छन् । बलियो लाइनअप देखिएको चलचित्रमा अभिनेता विजय बराल, अभिनेत्री केकी अधिकारी र मिरुना, मगर गौरव पहाडी, सुशांक मैनाली लगायतको मुख्य भूमिका छ । यस्तै, चलचित्रमा भोलाराज सापकोटा, रियर राई, भावना खपांगी मगर, रुपेश लामा, सुमन थापा लागायतको अभिनय रहेको छ ।

इन्डक्ल्याप कार्यक्रममा बोल्दै अभिनेता विजय बरालले भने, "केकीसँग पनि काम गरियो, मिरुनासँग पनि काम गरियो । अझै धेरै 'भयङ्कर मान्छे'सँग काम गर्ने मौका मिल्यो । म सामान्य मान्छे, त्यसैले त्यही पात्र परें । यो सिनेमामा बुबा-छोराको मात्र होइन, धेरै सम्बन्धको कथा छ । यसले दर्शकको मन छोला भन्ने विश्वास छ ।"

यस्तै, असोसियट निर्देशक राउतले जीवनको भोगाइमा र सम्बन्धको कथा, सिनेमाका ती पात्रहरूले गरेको संवाद र सङ्घर्षहरू जुन जनैको डोरी झौं बुन्ने प्रयास गरिएको बताए । पेपरक्लिप प्रोडक्सनको ब्यानरमा निर्माण भएको चलचित्रका निर्माता कमल न्यौपाने र विमल न्यौपाने हुन् । सह-निर्मातामा आरके मानन्धर, रुपेश लामा, सिआर बस्नेत र फिलिप डिसी रहेका छन् । चलचित्रको कथा, पटकथा र संवाद भानुभक्त ढकालले लेखेका छन् । दिनेश बहादुर राउत मुख्य सहायक निर्देशक रहेको चलचित्रमा तर्कराज न्यौपाने, रविन्द्र नेपाल, मोनिका थापा र आकाश के.सी सहायक निर्देशक रहेका छन् । चलचित्रमा प्रसान्त सिवाकोटी, एसडी योगी, थानेश्वर गौतम र अर्जुन पोखरेलको संगीत रहने छ ।

नवीन गुरुङ डीओपी रहेको चलचित्रमा कृष्ण परियारको सिनेमोटोग्राफी, रहेको छ । यो चलचित्र तिजको अवसर पारेर भदौमा प्रदर्शन गर्ने योजना भए पनि अझै मिति तय भइसकेको छैन ।

# "के घर के डेरा : घर नं २" जेठ २ गते रिलिज हुँदै

काठमाडौं । अभिनेता खगेन्द्र लामिछानेले 'के घर के डेरा : घर नं २' मा ठूलो संख्यामा स्टार कलाकार रहे पनि कथाको उठान र बैठानमा समस्या नरहेको बताएका छन् ।

चलचित्रमा धेरै पात्रको कथा रहेको तर त्यसको उठान र बैठान सरल र कुशल रहेको खगेन्द्रको दाबी छ । उनी आफैं पनि सबै पात्रको सहज ल्यान्डिङ देखेर छक्क परेको बताएका छन् ।

"म आफैं पनि लेख्ने भएकाले धेरै पात्र हुँदा कसरी हरेक पात्रलाई सहज ल्यान्डिङ गर्ने भन्नेमा अलमलमा हुन्छु । तर यो चलचित्रमा त्यस्तो छैन," उनले भने, "यसमा लेखकले लेख्दा पनि धेरै काम भएको होला । निर्देशकले पनि यसमा काम गरेको देखिन्छ, जसका कारण हरेक क्यारेक्टरको सहज ल्यान्डिङ छ ।"

उनले यो चलचित्रमा अचनाक काम गरेको बताएका छन् । चलचित्र 'विमान'को काममा व्यस्त रहेका बेला निर्देशक दीपेन्द्र के खनालले यो क्यारेक्टरमा तपाईंबाहेक अरु कोही पनि हुँदैन भनेपछि आबद्ध भएको उनको भनाइ छ । अरु निर्देशकले बोलाएको भए सायद नगर्ने उनले बताए । दीपेन्द्रसँग छुट्टै खालको बन्डिङ भएको उनले बताए ।

"दिउँसो 'के घर के डेरा : घर नं २'मा काम गरेर रातिराति विमानको काम गर्थें," उनले भने ।

क्यारेक्टरका लागि काम गर्ने समय धेरै नरहेकाले आफूले आफ्नो चरित्र निर्माणको सबै काम निर्देशकमा छोडिदिएको अभिनेता खगेन्द्रले स्मरण गरे ।

"म विमानको कामको प्रेसरमा थिएँ । त्यसैले क्यारेक्टरमा लामो समय लिएर काम गर्न सम्भव थिएन," उनले भने, "मैले यो कुरा निर्देशकलाई भनेको थिएँ । उहाँले जसरी काम लगाउनुभयो, मैले त्यसैगरी डिरेक्टर एक्टर भएर काम गरेको हुँ ।"

'दिमाग खराब'मा पनि आफूले यसैगरी काम गरेको उनले स्मरण गरे । त्यसैले यही दुई सिनेमामा आफूले गरेको कामको श्रेय पनि निर्देशकलाई जाने उनको भनाइ छ ।

'के घर के डेरा : घर नं २'मा घरभेटी, डेरावाल तथा घर र डेरा नै नभएको व्यक्तिको कथा रहेको उनले प्रष्ट पारे । यो नै चलचित्रको सुन्दर पक्ष भएको उनको भनाइ छ ।

यही कारण यो चलचित्र सबैको मन छुने उनको भनाइ छ । उनले गाउँबाट सहर आएर संघर्ष गर्ने मानिसहरूको कथा भएको बताए । त्यसैले यसलाई मौलिक कथा भन्न उनी रुचाउँछन् ।

'के घर के डेरा : घर नं २' जेठ २ गते रिलिज हुँदै छ । चलचित्रको कथा साहित्यकार बुद्धिसागरले लेखेका छन् ।

चलचित्रमा खगेन्द्र लामिछानेसँगै निश्चल बस्नेत, उपासना सिंह ठकुरी, आर्यन सिग्देल, केकी अधिकारी, प्रकाश घिमिरे, श्रृजना नापित, संजोग रसाइली, रुविना घिमिरे, सुरज विष्टलगायत कलाकारलगायतको अभिनय छ ।

चलचित्र एप्पल इन्टरटेन्मेन्ट, ए प्लस इन्टरटेन्मेन्ट तथा नटराज क्रिएसनको प्रस्तुतिमा निर्माण भएको हो ।

कृष्णबहादुर थापाको सिनेमामा छायांकन रहेको छ । 'के घर के डेरा : घर नं २'को कार्यकारी निर्माताको रूपमा युवराज कार्की छन् । निर्मातामा नकिमउद्दिन, शरद श्रेष्ठ र किरण महर्जन छन् ।

# बालुवाटारबाटै बनेपाको छायांकनस्थल शिलान्यास

काठमाडौं- बनेपा नगरपालिका-१० भैंसेपाटीमा निर्माण थाल्न लागिएको अत्याधुनिक चलचित्र छायाङ्कनस्थल (स्टुडियो) को मंगलबार बालुवाटारबाट शिलान्यास गरिएको छ ।

२०७७ देखि वातारणीय प्रभाव मूल्याङ्कन (इआईए) र बोलपत्र प्रक्रिया थालिएको यो स्टुडियोको मंगलबार प्रधानमन्त्री केपी शर्मा ओलीले बालुवाटारबाटै शिलान्यास गरेका हुन् ।

बनेपासम्म पुग्ने सडकको दुरावस्थाका कारण स्टुडियो शिलान्यास (निर्माण घोषणा) का लागि बालुवाटारलाई रोजिएको हो । अहिले जगाती-साँगा-बनेपा सडक विस्तारका लागि कयौं स्थानमा भत्काइएको छ ।

निर्माणको क्रममा रहेकाले यो सडकमा भीआईपी सवारी गराउन कठिनाई भएको छ । हिलाम्मे र धुलाम्मे अवस्थाको सडकका कारण स्थलमार्गबाट प्रधानमन्त्री बनेपा जान समस्या भएपछि बालुवाटारबाटै भर्चुअल शिलान्यास गरिएको हो ।

बनेपामा निर्माण हुने अत्याधुनिक इन्डोर फिल्म छायांकन स्टुडियोको नाम 'सिनेपाः' राखिएको छ। नेपालको पहिलो यस्तो स्टुडियोले विश्वस्तरीय प्रविधिमार्फत चलचित्र निर्माणलाई सहज बनाउने दाबी गरिएको छ ।

चलचित्र विकास बोर्डका अध्यक्ष दिनेश डीसीले 'सिनेपाः' नाम 'सिनेमा' र नेवार समुदायले नेपाललाई जनाउने 'पाः' शब्दको संयोजनबाट रोजिएको बताए ।

बनेपा नगरपालिका वडा नम्बर १० र ११ मा निर्माण हुने यो स्टुडियो सन् २०२६ सम्ममा तयार हुने बताइएको छ । वैशाख पहिलो साता ठेक्का स्वीकृत भएसँगै निर्माण तीव्र पारिएको छ।

स्टुडियो निर्माणका लागि बाहुनडाँडा सामुदायिक वनको २ हेक्टर जग्गा प्रयोग गर्न २०७८ असार २८ को मन्त्रिपरिषद् बैठकले स्वीकृति दिएको थियो। परियोजनाको कुल लागत ३९ करोड रुपैयाँ छ ।

ओलीले मंगलबार बालुवाटारमा आयोजित विशेष समारोहबीच स्टुडियो निर्माणको औपचारिक शुभारम्भ घोषणा गरेका छन्।

उनका अनुसार यो स्टुडियो नेपाली चलचित्रकर्मीको दशकौं पुरानो सपना हो। स्टुडियोले स्वदेशी चलचित्र निर्माणमा सहजता ल्याउनुका साथै विदेशी निर्मातालाई पनि नेपालमा छायांकनका लागि आकर्षित गर्नेछ ।

यो परियोजनालाई चलचित्र विकास बोर्डले 'नेपाली चलचित्र उद्योगको गौरव' भनेको छ। स्टुडियोले प्राविधिक सीमितताका कारण नेपाली फिल्ममा देखिने समस्यालाई समाधान गर्ने विश्वास छ ।

यो अत्याधुनिक 'इन्डोर सुटिङ स्टुडियो'बनेपास्थित भैंसेपाटीमा निर्माण गरिनेछ । यहाँ सबैभन्दा पहिला सुटिङका लागि एउटा भवन बनाइने छ । त्यसपछि सुटिङका लागि आवश्यक भवनलगायतका संरचना बनाइनेछ ।

'आउटडोर' र यहाँबाट देखिने वातावरणीय सुन्दरतालाई ध्यानमा राखेर छायाङ्कन स्टुडियो निर्माण गरिने भएको छ । इन्डोरमा अस्पताल, प्रहरी चौकी, कारागार, ठूला भवनका भित्री भाग देखिने प्रोटेबल सेटहरू निर्माण हुनेछन् ।

आउटडोरमा नेपाली चलचित्रको इतिहासको अध्ययन गर्नेका लागि चलचित्र म्युजियम, पुस्तकालय, स्क्रिप्ट लेखन तथा निर्देशनकक्ष र स्टुडियोसँगै फिल्मसम्बन्धी गोष्ठी, सेमिनार तथा क्षमता अभिवृद्धिका कार्यक्रम गर्न हलसहितको संरचना बनाइनेछ ।

'मिनी फिल्मी सिटी' अवधारणाको यो स्टुडियो निर्माणका लागि सुरुमा तत्कालीन सञ्चारमन्त्री गोकुलप्रसाद बास्कोटाको पालमा दुई करोड रुपैयाँ बजेट विनियोजन गरिएको थियो । चलचित्र छायाङ्कन स्टुडियोका लागि भैंसेपाटीको ४३ रोपनी सार्वजनिक जग्गा छनोट गरिएको थियो ।

# "अपरेशन सिन्दुर" को ट्रेडमार्क लिने होड

काठमाडौं । भारतले कास्मिरमा पर्यटकहरु माथि भएको आतंकवादी हमलालाई पाकिस्तान सरकारको तर्फबाट भएको दावीका साथ पाकिस्तानमाथि हवाइ आक्रमण गर्न 'अपरेशन सिन्दुर' सञ्चालन गरेको थियो । सोही अपरेशन अन्तर्गत भारतले पाकिस्तान माथि हवाई तथा ड्रोन हमलासमेत गरेको र जवाफमा पाकिस्तानले पनि मिसाइल र ड्रोनबाट जवाफी आक्रमण गरेसँगै दक्षिण एशियामा युद्धको माहोल मौलाउँदै गएको र यसबाट पुरै एशियालाइ नै खतरा भएको कारण छिटै भारत र पाकिस्तानले युद्ध विरामको घोषणा गरि सकेको छ ।

यही भारतीय सेनाको अपरेशन सिन्दुर नामको 'ट्रेडमार्क' दर्ता गर्ने होडबाजी बलिउडमा शुरु भएको छ । भारतले बुधबार सबेरै ९ स्थानलाई लक्षित गर्दै पाकिस्तानी भूमिका ९ स्थानमा हवाई आक्रमण गरेको थियो ।

यससँगै 'अपरेसन सिन्दुर' मा आधारित रहेर सिनेमा र वेब सिरिज बनाउनका लागि भारतीय कम्पनीबीच नामको 'ट्रेडमार्क' लिने होडबाजी शुरु भएको हो । हालसम्म उक्त नामका लागि कम्तीमा चार वटा आवेदन परेको भारतीय सञ्चार माध्यमले जनाएका छन् ।

भारतीय समाचार पोर्टल द प्रिन्टका अनुसार 'नाइस क्लासिफिकेसनको ४१ औं क्लास' अनुसार 'अपरेशन सिन्दुर' को 'ट्रेडमार्क' दाबी गर्न आवेदन परेको हो । यस क्लासिफिकेसन अनुसार शैक्षिक मनोरञ्जनात्मक र खेलकुद/साँस्कृतिक गतिविधिका लागि 'ट्रेडमार्क' दिइन्छ ।

भारतको पेटेन्ट डिजाइन तथा ट्रेडमार्क कार्यालयका अनुसार सर्वप्रथम रिलायन्स इण्डष्ट्रिजले 'अपरेशन सिन्दुर' को पहिलो ट्रेडमार्क आवेदन दिएको थियो ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४
स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ३८ ने.सं. ११४५ बछलागा नवमी जेठ ०७ गते बुधबार, २०८२ 21 May 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## गठबन्धन सरकार प्रति आमजनता र स्वयं कांग्रेस सशंकित, तर ओली–देउवा एक !



काठमाडौं । देशमा राजनीतिक संकट गहिरिदै गएको अवस्था छ । अहिले आम जनमानसमा सरकारप्रति अविश्वास बढ्न थालेको छ । अर्को तर्फ देशकै अर्थतन्त्रको मेरुदण्डको. रुपमा रहेको नेपाल राष्ट्र बैंकको गभर्नर नियुक्तिमा दुई ठूला राजनीतिक दलहरुको भागबन्दाको कारण पनि सरकार प्रति विपक्षी दललगायत आम जनमानसमा समेत अविश्वासको वातावरण बढ्दै गएको प्रति नेपाली कांग्रेस सभापति देउवा प्रधानमन्त्रीको रोलक्रममा रहेकै कारण सरकारका हरेक काम कारवाही प्रतिम ौन सहमति जनाइरहेको आरोप लाग्ने गरेको छ । किनकी सत्तापक्षकै नेपाली कांग्रेसका नेताहरु बर्तमान सरकारका काम कारवाहीबाट सन्तुष्ट नभएको तिनका गतिविधि र विभिन्न राजनीतिक सभा सम्मेलन मार्फत अभिव्यक्त भइरहको छन् ।

अर्को तर्फ नेकपा एमाले अध्यक्ष तथा बर्तमान सत्तापक्षको नेतृत्व सम्हालेका प्रधानमन्त्री के.पी.शर्मा ओलीका लागि नेपाली कांग्रेससँगको सहमती अनुरुप बाँकी रहेको प्रधानमन्त्रीको कार्यकाल पुरा गर्नकै लागि देउवाको सीमित शर्त वा माग सम्बोधन गनूको विकल्प उनीसँग अर्को छैन । तसर्थ प्र.म. ओली अहिले दोहोरो चेपुवामा परेकै कारण पनि जनताको पक्षमा काम कारवाही गर्न नसकिरहेको एमाले नेताहरुको बुझाइ रहेको छ ।

गभर्नर नियुक्तिमा केही ढिलाइकै आधारमा सरकार ढल्नेसम्मको स्थिति आउन नदिनेमा दुवैबीच सहमति भएको छ । यसैले अब ओलीले १४ महिनापछि सत्ता हस्तान्तरण गर्ने र देउवाले त्यतिखेरसम्म पर्खिने गरी उनीहरूबीच आन्तरिक समझदारी भएको हो ।

गत वैशाखको दोस्रो साता देउवा थाइल्यान्ड जाँदा अनेक आशंका व्यक्त भएका थिए । तर, देउवा फर्किएपछि ओली र देउवाबीच लामो संवाद भयो । दुवैले समीकरणमा समस्या देखिए समाधान गर्ने र सत्ता सहकार्यलाई निरन्तरता दिनेगरी सहमति गरेका हुन् । त्यसयता ओली र देउवा दुवैले आफूहरूबीच असमझदारी नभएको पटक–पटक बताउँदै आएका छन् । ओलीले नै केही दिनअगाडि १४ महिनापछि किस्तीमा राखेर देउवालाई सत्ता हस्तान्तरण गर्ने सार्वजनिक रूपमै बताए । त्यसकै केही दिनपछि देउवाले पनि शनिबार काठमाडौंमा भएको एक कार्यक्रममा कसैको बहुमत नपुग्ने संसदको गणितमा एमालेसँग सरकार बनाएको र कुनै समस्या नरहेको प्रस्ट्याएका थिए ।

'हामीले समावेशीतर्फ महिला, मधेसी, दलित, जनजाति, थारू, मुस्लिमसहितका सबै समुदायको प्रतिनिधित्वको विकास गरेका छौं । सबैलाई अधिकार दिने अभ्यास गर्दा सबैको अपनत्व पनि हुन पाएको छ,' देउवाले भने, 'तर सदनमा कसैको पनि बहुमत पुग्न गाह्रो छ । सबैभन्दा ठूलो पार्टी भएर पनि हामीसँग बहुमत छैन । यसैले बहुमत नभएपछि समीकरण बनाउनुपर्ने बाध्यता छ । यही कारण हामीले एमालेसँग सरकार बनायौं ।' देउवा सरकारको विषयलाई लिएर किचलो नगर्न पक्षमा भएको प्रस्ट सन्देश दिए ।

'ओलीजी पनि दुःख पाएको व्यक्ति हो । उहाँलाई गोलघरमा राखिएको थियो,' प्रधानमन्त्रीप्रति भरोसा देखाउँदै देउवाले भनेका थिए, 'सरकारमा केही कमजोरी होलान् । यसलाई कम गर्दै जानेछौं । तर, अरू कुराले सरकारमाथि दबाब बढाउन आवश्यक छैन ।'

पार्टीभित्र ओलीसँगको सत्ता सहकार्यलाई लिएर आशंका उत्पन्न हुने गरी नेता र सांसद बोले पनि देउवा भरोसा गरेरै जाने मानसिकतामा देखिएका छन् । महामन्त्री गगन थापादेखि डा. शेखर कोइरालासम्मले सरकारको निरन्तरताबारे प्रश्न उठाउँदा पनि

बाँकी पेज ७ मा

## भक्तपुर नगरपालिकामा जनप्रतिनिधिको ३ वर्ष कार्यकाल




भक्तपुर । नेपाल मजदुर किसान पार्टीका सचिव प्रेम सुवालले नगरलाई सफा बनाउन नगरको ढल व्यवस्थापन र सरसफाइमा नगरपालिकाले विशेष ध्यान दिनुपर्ने बताए । भक्तपुर नगरपालिकामा जनप्रतिनिधिको ३ वर्ष कार्यक्रमको उद्घाटन गर्दै सचिव सुवालले भक्तपुर नगरलाई सफा, स्वच्छ, सांस्कृतिक नगर र पारदर्शी बनाउने लक्ष्यअनुसार यस नगर अगाडि बढिरहेको बताउँदै शैक्षिक

बाँकी पेज ७ मा

## असुरक्षा र प्रेस स्वतन्त्रता हनन प्रति चिन्ता व्यक्त गर्दै प्रजिअलाई ज्ञापन पत्र



भक्तपुर । प्रेस सेन्टर नेपाल भक्तपुरले हाल पत्रकार हरूमाथि बढ्दो असुरक्षा र प्रेस स्वतन्त्रता हननप्रति चिन्ता व्यक्त गर्दै भक्तपुरका प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्यालमार्फत सरकारलाई ज्ञापन पत्र बुझाएको छ । जिल्ला अध्यक्ष मदन ढुङ्गानाको नेतृत्वमा रहेको जिल्ला कार्यसमितिले मंगलबार सो ज्ञापन पत्र बुझाएको हो ।

सो अवसरमा सेन्टरका पूर्व नेताहरू नेपाल पत्रकार महासंघ उपत्यका प्रदेशका कोषाध्यक्ष संजीप घिमिरे, भक्तपुर शाखा सदस्य अञ्जीर सिंह बिक र सेन्टरका प्रदेश सचिव बाबुकाजी श्रेष्ठको समेत उपस्थिति रहेको थियो ।

प्रेस सेन्टरले आफ्नो केन्द्रीय कार्यालयको निर्देशन बमोजिम गत बैशाख अन्तिम साता देशब्यापीरुपमै प्रमुख जिल्ला अधिकारी मार्फत ज्ञापन पत्र बुझाउने तालिका रहेको

बाँकी पेज ७ मा

## पुनःनिर्माणमा भक्तपुर, लागत भन्दा ३ करोड कममा लक्ष्मीनरसिंह मन्दिरको पुननिर्माण





भक्तपुर । भक्तपुर नगरपालिकाले लागत इस्टिमेट भन्दा करिब ३ करोड कम खर्चमा ऐतिहासिक एवं पुरातात्त्विक सम्पदा लक्ष्मीनरसिंह मन्दिरको पुनर्निर्माण सम्पन्न गरेको छ ।

२०७८ मंसिरमा पुनर्निर्माण शुरु भएको भक्तपुर-४ तः मारी क्षेत्रको गःहिटीस्थित सो मन्दिर नगरपालिकाका जनप्रतिनिधिले ३ वर्ष पूरा गरेको अवसर पारेर मंगलबार उद्घाटन समेत गरिएको छ ।

मन्दिरको कुल लागत इष्टमेट रु. ७ करोड ७७ लाख रहेकोमा रु. ४ करोड ८३ लाख खर्चमा पुनःनिर्माण कार्य सम्पन्न भएको उपभोक्ता समितिका अध्यक्ष न्हुछेराम भेलेले बताएका छन् ।

पुनर्निर्माणमा २२ लाख ६६ हजारभन्दा बढी नगद सहयोगस्वरुप प्राप्त भएको र ७ सय ५० जनाभन्दा बढीले श्रमदान गरेका थिए भने लाखौ रुपैयाँ बराबरको जिन्सी सामान स्थानीयले सहयोग गरेका थिए ।

वरिष्ठ राजनीतिज्ञ एवं नेपाल मजदुर किसान पार्टीका अध्यक्ष

बाँकी पेज ७ मा

## उच्च अदालतको अन्तरिम आदेशपछि नेवाः देय् दबूको चालु अधिवेशन स्थगित

काठमाडौं । पाटन उच्च अदालतले नेवाः देय दबुको चालु बन्द सत्र नगर्न अन्तरिम आदेश जारी गरेको परिपत्रसँगै जेठ २ गतेबाट ४ गतेसम्म भइरहेको दबूको आठौं अधिवेशन बीचमै स्थगित भएको छ ।

अधिवेशन स्थगन पछि सातै प्रदेशका दबूसँग आवद्ध नेवाः समुदायमा चिन्ता बढाउनुका साथै नेवाःहरूको राष्ट्रिय संगठन दबूमाथि अनेकौं प्रश्नहरु उठन थालेको छ । एक नेपालभाषा समाचार पत्रिकामा उल्लेख भए अनुसार मुख्यतः अधिवेशन स्थगित गर्नका लागि यसै दबूकै संस्थापकहरूकै हात रहेको जनाएको छ ।

दबूका १९ जना संस्थापकमध्ये हाल जीवित ५ जनामध्येका १ जना संस्थागत संस्थापक काठमाडौंका नरेशवीर शाक्य र अर्का व्यक्तिगत संस्थापक पोखराका प्रकाशमान पालिखेले नेवाः देय् दबूको अधिवेशन विधान सम्मत नभएको र स्थापित




संस्थापकहरूप्रति वर्तमान पदाधिकारीहरूले बेवास्ता गरी पदाधिकारीहरू उमेदवार बन्न नपाइने प्रतिनिधि मात्र भएर उपस्थिति जनाउन पाइने भन्ने विधान र नियम बनाइएकोमा असन्तुष्ट जाहेर गर्दै अधिवेशन स्थगनका लागि अदालतको ढोका ढक्ढकाएको बताइएको छ ।

उजुरीकर्ता नरेशवीर शाक्यले दिएको जानकारी अनुसार देय् दबूका संस्थागत र व्यक्तिगत संस्थापकहरूलाई महाधिवेशनमा भाग लिएर मात्र उम्मेदवारको रूपमा उम्मेदवार बन्न पाउने अधिकारबाट वञ्चित गर्ने नियम बनाएर अलोकतान्त्रिक कार्य गरेकाले यो कदम चाल्न बाध्य भएको बताउनुका साथै संस्थापक सदस्य नभएकाहरूलाई पनि मञ्चको संरक्षकको रूपमा नियुक्त गरिएको बताइएको छ ।

अदालती प्रकियामा

बाँकी पेज ७ मा

# काक्राबारी प्लटिंगमा सिडिओ अफिसको छलफलबाट भएका निर्णय



निर्णयहरु

१. सूर्यविनायक नगरपालिका वडा नं. ९ स्थित काक्राबारीमा निक भुजिकिक हाउजिङ्ग प्रा.लि. नामक निजी फर्मले जग्गा प्लटिङ्गको कार्य गर्दा सम्बन्धित निकायबाट कानून बमोजिम प्राप्त गर्नुपर्ने स्वीकृति प्राप्त नगरेको तथा सरकारी वन तथा सार्वजनिक जग्गा समेतमा डोजर लगाई अतिक्रमण गरेको भन्ने समेतको विषयमा प्राप्त गुनासो तथा सूचनाको आधारमा प्रमुख जिल्ला अधिकारीको नेतृत्वमा सुरक्षा निकायका प्रमुखहरु तथा सम्बन्धित विषयगत निकायका जिल्लास्थित कार्यालय प्रमुखको संयुक्त टोलीले मिति २०८२/०१/२१ मा सो कार्यको स्थलगत अनुगमन गरी तत्कालको लागि सो कार्य स्थगित गर्न निर्देशन दिई नापी कार्यालय, भूमिसुधार तथा मालपोत कार्यालय, काठमाडौँ उपत्यका विकास प्राधिकरण, जिल्ला आयुक्तको कार्यालय र सूर्यविनायक नगरपालिका, डिभिजन वन कार्यालयलाई उक्त विना स्वीकृति जग्गा प्लटिङ्ग गरेको तथा वन तथा सार्वजनिक जग्गा अतिक्रमण गरेको विषयमा तथ्यगत विवरण उपलब्ध गराउन, प्रचलित कानून विपरित भएगरेका सम्बन्धमा कानून बमोजिम कारवाही प्रक्रिया अगाडि बढाई ७ दिनभित्र सोको जानकारी जिल्ला प्रशासन कार्यालय, भक्तपुरलाई उपलब्ध गराउन मिति २०८२/०१/२४ मा पत्राचार गरिएकोमा देहायको विवरण तथा जानकारी प्राप्त हुन आएको:-

क. कुलो, पर्ति, बाटो समेतका ६-७-०-० रोपनी सरकारी एवम् सार्वजनिक प्रकृतिको जग्गा, २२-५-०-० रोपनी क्षेत्रफल सामुदायिक वन अतिक्रमण गरी डोजर लगाएको देखिएको व्यहोरा नापी कार्यालय र डिभिजन वन कार्यालय, भक्तपुरबाट प्रतिवेदन प्राप्त भएको ।

ख. उक्त आयोजना/कम्पनीले जग्गा प्लटिङ्गको कार्य गर्दा काठमाडौँ उपत्यका विकास प्राधिकरण, अनामनगरबाट स्वीकृति लिनुपर्ने र त्यस्तो स्वीकृति प्राप्त गरी नसकेको व्यहोरा जिल्ला आयुक्तको कार्यालय, भक्तपुरबाट प्रतिवेदन प्राप्त भएको ।

यस विषयमा उक्त जग्गा प्लटिङ्गको कार्य भएको स्थलको ठीक तलपट्टि रहेको बस्तिको ६० जना व्यक्तिहरुको हस्ताक्षर सहितको श्री गृह मन्त्रालय, सिंहदरबार, काठमाडौंलाई लेखी जिल्ला प्रशासन कार्यालय, भक्तपुर समेतलाई बोधार्थ दिएको मिति २०८२/०२/०२ को ज्ञापन पत्रमा उक्त पत्रानुसार जिल्ला प्रशासन कार्यालयबाट काम रोक्का राख्दा प्लटिङ्गको सिलसिलामा सो कम्पनीले हालसम्म गरेको जथाभावी जमिन कटिङ्गकका कारण सो प्लटिङ्गको कार्य भएको स्थानको तल्लो भागमा रहेका वस्तीमा लेदो सहितको बाढी तथा पहिरोको उच्च जोखिम रहकोले विपद् जोखिम न्यूनीकरणको लागि सम्बन्धित कम्पनीलाई वस्ती संरक्षणको कार्य गराउने व्यवस्थाको लागि अनुरोध भई आएको छ । अत: सरकारी सामुदायिक वन क्षेत्रमा निक भुजिकिक हाउजिङ्ग प्रा.लि.बाट माथि उल्लेख भए बमोजिम भएको अनधिकृत अतिक्रमण नियन्त्रण गरी प्रचलित कानून बमोजिमको कारवाही गर्ने/गराउने, एकीकृत जग्गा विकासको लागि प्रचलित कानून बमोजिम सम्बन्धित निकायबाट लिनु पर्ने स्वीकृति लिएपछि मात्र जग्गा विकासको कार्य गराउने तथा सो जग्गा प्लटिङ्ग सम्बन्धी अनधिकृत कार्यको कारण सो स्थानमा रहेको वस्तीमा सृजना हुन गएको मनसुनजन्य विपद् जोखिम न्यूनीकरण गराउने प्रयोजनको लागि देहाय बमोजिम गर्ने निर्णय गरियो ।

१. वन क्षेत्रमा भएको अतिक्रमण मुक्त गर्नको लागि सम्बन्धित नापी कार्यालयबाट निर्धारण भए बमोजिमको सीमाक्कनमा पुन: अतिक्रमण हुन नसक्ने गरी सूर्यविनायक नगरपालिकाको रेखदेख तथा प्राविधिक सल्लाहमा मजबुत खालको घेराबार/पर्खाल प्राविधिक हिसाबले जे उपयुक्त हुन्छ सो व्यवस्था निक भुजिकिक हाउजिङ्ग प्रा.लि.ले तत्काल गर्ने ।

२. उक्त जग्गा प्लटिङ्गको कार्य भएको तल्लोपट्टि रहेको वस्ती समेतको क्षेत्रमा सो अनधिकृत प्लटिङ्गको कारण सिर्जित प्रकोप जोखिम न्यूनीकरण गर्नको लागि मात्र मजबुत खालको पर्खाल समेतको उपयुक्त संरक्षण संरचना निक भुजिकिक हाउजिङ्ग प्रा.लि.ले तत्काल निर्माण गरी तल्लो क्षेत्रमा बस्ने स्थानीय बासिन्दालाई आश्वत पार्ने कार्य गर्ने। यस प्रयोजनको लागि सूर्यविनायक नगरपालिकाको प्रमुख प्रशासकीय अधिकृतको संयोजकत्वमा देहायको अनुगमन टोलीले उक्त संरक्षण कार्यको नियमित अनुगमन गरी जिल्ला प्रशासन कार्यालय समेत सम्बद्ध निकायलाई प्रतिवेदन गर्ने ।

# देशकै दोस्रो जेठो अस्पतालमा सिटी स्क्यान सेवा सुरु




भक्तपुर । एक शताब्दी भन्दा अगाडि स्थापना भएको उपत्यकाकै जेठो अस्पताल भक्तपुर अस्पतालले १२३ वर्षपछि पहिलोपटक अत्याधुनिक सिटी स्क्यान मेसिन सञ्चालनमा ल्याएको छ । आइतबार अस्पताल परिसरमै भएको एक कार्यक्रममा वागमती प्रदेशका स्वास्थ्य मन्त्री किरण थापाले सेवाको सुभारम्भ गरे ।

वीर अस्पतालपछि स्थापना भएको दोस्रो पुरानो अस्पतालका रूपमा चिनिएको तत्कालीन प्रधानमन्त्री चन्द्रशमशेर राणाले चन्द्रलोक डिस्पेन्सरीको नाममा स्थापना गरेको अस्पतालमा बागमती प्रदेश सरकारले खरिद गरेर पठाएको अत्याधुनिक क्षमताको सिटी स्क्यान सञ्चालनमा आएको हो ।

मेसिन (उपकरण) बाट औपचारिक रूपमा आइतबारदेखि बिरामीलाई सेवा प्रवाह गरिएको अस्पताल प्रशासनले जनाएको छ । यसअघि मेसिन भक्तपुर अस्पतालमा ल्याएसँगै बागमती प्रदेश सरकारका स्वास्थ्यमन्त्री किरण थापा र बागमती प्रदेशसभाका सांसद सुरेश श्रेष्ठले मेसिन जडान क्षेत्रको अवलोकन गरी यथाशीघ्र सञ्चालनमा ल्याएर आमनागरिकलाई सहज र सुलभ सेवा प्रवाह गर्न अस्पतालका कार्यकारी निर्देशक डा सुरेन्द्रप्रसाद भट्टलाई निर्देशन दिएका थिए ।

अस्पतालका लागि बागमती प्रदेश सरकारअन्तर्गत स्वास्थ्य मन्त्रालयले बोलपत्र आह्वान गरी रु आठ करोड बजेटमा १२८ स्लाइसको सिटी स्क्यान मेसिन खरिद गरेर सञ्चालनमा ल्याइएको हो ।

कोरोना महामारीमा अस्पतालका तत्कालीन मेडिकल सुपरिटेन्डेन्ट एवं हाल बागमती प्रदेश स्वास्थ्य मन्त्रालयका सचिव डा सुमित्रा गौतमले यो अस्पताललाई रिफर सेन्टरबाट विशेषज्ञ सेवासहितको गुणस्तरीय सेवा दिलाउन सफल भएपछि देशकै उत्कृष्ट अस्पताल घोषणा भएको थियो ।

अस्पतालका कार्यकारी निर्देशक डा भट्टले सिटी स्क्यान जडान गरी परीक्षण सम्पन्न गरिएको बताउँदै आइतबार बिहान उद्धाटन गरेसँगै औपचारिक रूपमा सञ्चालनमा आएको बताए । उनले अब बिरामीले सिटी स्क्यान गर्न अन्य अस्पतालमा महँगो शुल्क तिरेर धाउनु नपर्ने बताए । कार्यक्रममा बागमति प्रदेशका पूर्व मुख्यमन्त्रीका राजनीतिक सल्लाहकार डि.बि. ढकालले भक्तपुर जिल्लामा स्वास्थ्य क्षेत्रको विकासका लागि दिन सक्ने तहमा पुगेका सबै जनप्रतिधिले जिल्लाको विकास निर्माणमा बिना पूर्वागृह खुल्ला रुपमा सहयोग गर्नु पर्ने धारणा व्यक्त गरेका थिए । कार्यक्रम अस्पताल व्यबस्थापन समितिका अध्यक्ष शशिजङ्ग थापाको सभापतित्वमा भएको थियो ।



# अन्तर्राष्ट्रियस्तरमा नेपालको छवि बिग्रेकोप्रति चिन्ता

काठमाडौं । नागरिक अगुवा डा. महेशमान श्रेष्ठले अन्तर्राष्ट्रिय स्तरमा नेपालको छवि बिग्रेकोप्रति चिन्ता व्यक्त गरेका छन् । नेवा: मिसा ग्वहालि पुच: र नेवा: ग्वहालि पुच: काठमाडौं महानगर वडा नं २६ ले गरेको क्षमता विकास प्रशिक्षण कार्यक्रममा उनले देशप्रतिको चिन्ता व्यक्त गरेको हो । राजनीतिक दलभित्रका विकृत नेता र सोही आचरण भएका कर्मचारीले भ्रष्टाचारमार्फत कुशासन गरेर देश बिगारेको डा. श्रेष्ठको आरोप छ ।

कार्यक्रममा उनले नेपाली कांग्रेस, नेकपा एमाले, माओवादी लगायतका दलले गलत प्रवृत्तिका नेता कार्यकर्तालाई संरक्षण दिएकोप्रति आक्रोस पोखे । 'अब देशलाई माया गर्ने देशभक्तहरुको संयुक्त मोर्चा बनाउनु पर्छ । सो मोर्चालाई भाषण कलासँगै अन्य विविध पक्षको प्रशिक्षण दिएर सहि शासन प्रणाली लागू गराउनेतर्फ अग्रसर बनाउनुपर्छ ।' डा. श्रेष्ठको भनाइ छ ।

हुन पनि बिबिसी, सीएनएन, अलजजिरा, फोक्स न्यूजहरुमा पछिल्लो समय नेपालमा व्याप्त रहेको भ्रष्टाचार सम्बन्धी समाचार प्रशारण भएका छन् । यसले गर्दा नेपालको छवि अन्तर्राष्ट्रिय स्तरमा बिग्रेको छ । डा. श्रेष्ठले भ्रष्ट नेताहरुको ठाउँमा इमान्दार, सक्षम र देशलाई सच्चा माया गर्ने नेताहरुको आवश्यकता रहेको बताए । उनले पछिल्लो समय नयाँ पुस्ताको मातृभाषाप्रतिको विकर्षणप्रति चिन्ता व्यक्त गर्दै नेपालभाषा क्लब, आदिवासी नेवा: राजनीतिक अभियान, नेवा: ग्वहालि पुच: र नेवा: मिसा ग्वहालि पुच:ले भाषा संरक्षणमा दिंदै आएको योगदानको चर्चा गरे ।

सामाखुसीस्थित प्रज्ञा स्कूलको हलमा सुरु भएको पाक्षिक प्रशिक्षण कार्यक्रममा उद्घोषण, औपचारिक कार्यक्रममा सिलसिला मिलाएर बोल्ने शैली, संस्था सञ्चालनको तरिका सम्बन्धी तालिम दिइनेछ । ग्वहालि पुच:ले यसअघि कीर्तिपुर, तारकेश्वर नगरपालिकाको मनमैजु, फुटुङ, धर्मस्थली, भक्तपुरको थिमि, टोखा, काठमाडौंका विभिन्न टोलमा प्रशिक्षण कार्यक्रम सम्पन्न गरेको छ । कार्यक्रममा महानगरपालिकाभित्रका विभिन्न वडाका जनप्रतिनिधि, समाजसेवी, शिक्षासेवी, गृहिणीलगायत सहभागी थिए ।

# थिमिमा क्षयरोग सम्बन्धी अन्तरक्रियात्मक गोष्ठी सम्पन्न

भक्तपुर । नेपाल क्षयरोग निवारण संस्था र राष्ट्रिय क्षयरोग निवारण केन्द्रको आयोजना तथा जिल्ला जनस्वास्थ्य कार्यालय भक्तपुरको संयोजनमा क्षयरोग सम्बन्धी अन्तरक्रियात्मक कार्यक्रम शनिबार सम्पन्न भएको छ । कार्यक्रममा जनस्वास्थ्य कार्यालयका स्रोत व्यक्ति पार्वती थापाले हाल भक्तपुर जिल्लामा ४ सय ८७ जना क्षयरोगीहरुले औषधी सेवन गरिरहेको जानकारी दिदै मानवमा क्षयरोग कसरी सर्छ र सोको निदान तथा अपनाउनु पर्ने स्वास्थ्य सचेतना बारे जानकारी दिइएको थियो । उनले ८० प्रतिशत क्षयरोग सरुवा भएको र २० प्रतिशत नसर्ने क्षयरोग भएको जानकारी दिदैं मान्छेको शरीरको रौं र कपाल बाहेक जुनसुकै अंगमा क्षयरोग लाग्न सक्ने जानकारी दिए ।

नेपाल क्षयरोग निवारण संस्था भक्तपुरका सभापति हिरण्यप्रताप साँगामीको सभापतित्वमा भएको कार्यक्रम थिमिको आदर्श मा.वि.को सभाहलमा सम्पन्न भएको थियो ।

संस्थाका सचिव विजय कर्माचार्यले कार्यक्रमको परिचय, उद्देश्य र महत्वबारे प्रकाश पारेको कार्यक्रममा संस्थाकी उपाध्यक्ष एवं कार्यक्रम संयोजक राजेश्वरी शिल्पकारले स्वागत मन्तव्य राखेको थियो ।

# नवआगन्तुक विद्यार्थीहरूलाई स्वागत



भक्तपुर । विनायक शिक्षा निकेतन इङ्लिस स्कुलमा जेष्ठ ४ गते नवआगन्तुक विद्यार्थीहरूका लागि स्वागत कार्यक्रमको आयोजना गरेको छ । शैक्षिक सत्र २०८२ सालमा हरेक कक्षामा केही सिटका लागि मात्र भर्ना लिइएका कक्षा १ देखि ९ सम्मका करिब ६३ जना विद्यार्थीहरूको सम्मानमा उक्त कार्यक्रम आयोजना गरिएको विद्यालयका प्रिन्सिपल सुरेन्द्र बिक्रम प्रजापतिले जानकारी दिए ।

नव आगन्तुक विद्यार्थीहरूलाई खादा टिका र मायाको चिनो प्रदान गरिएको उक्त कार्यक्रममा विद्यार्थीहरूले आआफ्नो प्रतिभा र क्षमतासमेत प्रस्तुत गरेका थिए । कार्यक्रममा नव आगन्तुक विद्यार्थीहरूले बलियो शैक्षिक इतिहास बनाइसकेको यस विद्यालयमा अध्ययन गर्ने अवसर पाएकोमा आफूहरू भाग्यशाली र गौरवान्वित भएको कुरा व्यक्त गरेका थिए । साथै यहाँको शिक्षण विधि र पद्धति, पढाइको वातावरण र अनुभवी शिक्षक शिक्षिकाहरूको अध्यापनबाट आफूहरू प्रभावित भएको कुरा व्यक्त गरेका थिए ।

कार्यक्रममा विद्यालयका प्रिन्सिपल प्रजापतिले विनायकलाई विश्वास गरी आएका सम्पूर्ण विद्यार्थीहरूलाई स्वागत गर्दै प्रगतिशील सोचका साथ रूपान्तरित एवं गुणस्तरीय शिक्षाका लागि विद्यालय सदैव प्रतिबद्ध रहेको बताए ।

# एआई च्याटबटको प्रयोगमा सावधान ! हुन सक्छ डेटा लिक




काठमाडौं । तपाईं च्याटजीपीटी प्रयोग गर्नुहुन्छ ? अथवा कुनै एआई टुलहरू कतिको प्रयोग गर्नुहुन्छ ? कुनै सामान्य जानकारी, पढाइ वा व्यावसायिक कामका लागि नभइ आफ्ना व्यक्तिगत कुराहरू साट्न एआई प्रयोग गर्नुहुन्छ ?

जानेर वा नजानेर एआई च्याटबटसँग मानिसको सम्बन्ध गहिरो हुँदै गइरहेको छ । केही प्रयोगकर्ता त झन् कसैलाई भन्न नसकेका कुराहरू पनि च्याटबटसँग खुलेर शेयर गरिरहेका हुन्छन् । अझ कतिलाई बरु मलाई मेरा मान्छेहरूले भन्दा मेसिनले बढी बुझ्छ । यसले मलाई धेरै सुझाव दिन्छ, मेरो कुरा सुन्छ भन्ने पनि लाग्छ होला !

हालै एक कार्यक्रममा मेटाका सीईओ मार्क जुकरबर्गले पनि मेसिनले मानिसलाई धेरै बुझून् भन्ने चाहना रहेको र आफूहरूले यस्तै एआईमा काम गरिरहेको बताएका थिए । उनी चाहन्छन्- मेसिनले मान्छेलाई साथीको रूपमा वा व्यावसायिक सल्लाहकारको रूपमा मात्र होइन, मनोपरामर्शदाताको रूपमा पनि सहयोग गरोस् । "जो व्यक्तिसँग परामर्शदाता (थेरापिस्ट) हुँदैनन्, उनीहरू सबैसँग अब एआई हुनेछ," उनी भन्छन् ।

एआई टुलहरू मानिसका लागि राम्रो थेरापिस्ट बन्न सक्छन् कि सक्दैनन् भन्ने कुरा अझै स्पष्ट छैन । तर धेरै मानिसहरू अहिले नै आफ्ना गोप्य कुरा च्याटबटसँग शेयर गरिरहेका छन् । थेरापीकै लागि भनेर बनाइएका एपहरू परामर्शका लागि विशेष प्रयोग हुने गरेका छन् । त्योभन्दा धेरै प्रयोगमा आउने एपहरूमा मेटा एआई, ओपनएआईको च्याटजीपीटी वा एक्सको ग्रोकलगायत रहेका छन् ।

तर यो प्रयोग नजानिँदो पारामा मानिसहरूका लागि जोखिमपूर्ण बन्दै गइरहेको छ । आफ्ना गोप्य कुरा मेसिनसँग शेयर गर्दै गर्दा ती कुरा मेसिनले मात्र सुनिरहेको छ वा अरू कोही मानिसले पनि सुनिरहेको छ ? यस विषयमा हामी अनभिज्ञ छौं ।

इन्टरनेटमा कुनै पनि कुरा गोप्य रहँदैन भन्ने कुरा सामान्य बुझाइ हो । तर अहिले अमेरिकामा दुई गम्भीर प्रवृत्तिहरू एक-अर्कामा तानातान गरिरहेका छन् । एकातिर, प्रविधि कम्पनीहरू प्रयोगकर्तालाई आफ्ना निजी विवरण एआईलाई बताउन उक्साइरहेका छन्, जुन कुरा प्रयोगकर्ताले सामाजिक सञ्जालमा राख्दैनन्, आफ्ना नजिकका साथीलाई पनि भन्दैनन् । अर्कातिर, सरकारले नागरिकका मनोविज्ञान, लिंग पहिचान, मानसिक अवस्था, जातीय दृष्टिकोणजस्ता संवेदनशील विवरणहरूमा विशेष निगरानी गर्न खोज्दैछ ।

अनि यसका लागि अमेरिकी सरकार कुनै कानुन र नैतिकताको ख्याल नै नगरी सकेसम्म धेरै जानकारी हात पार्दैछ ।

केही उदाहरणहरू:

-अमेरिकाका संघीय कानुन प्रवर्तन निकायहरूले कानुनी रूपमा बसोबास गरिरहेका आप्रवासीहरूलाई अभिव्यक्ति स्वतन्त्रताको आधारमा गिरफ्तार गरे । जस्तै; एकजना विद्यार्थीलाई पत्रिकामा लेख लेखेकै आधारमा हप्तौंसम्म थुनामा राखियो ।

-अमेरिकाकै स्वास्थ्य सचिव रोबर्ट एफ. केनेडी जुनियरले डिप्रेसनका औषधिहरूको सट्टा मानिसहरूलाई पुनर्स्थापना शिविरमा पठाउन सुझाव दिएका छन् । उनले अटिजम भएका व्यक्तिहरूको अभिलेख सङ्कलन गर्ने संघीय डेटाबेस बनाउने योजना समेत घोषणा गरेका छन् । यो डेटाबेस मेडिकल फाइल र वेयरेबल डिभाइसहरूको डेटा प्रयोग गरेर तयार गरिने बताइएको छ । हालैको स्वास्थ्य तथा मानव सेवा विभागको एक रिपोर्टले अटिजमलाई जेन्डर डायसफोराको कारणले हुने गरेको संकेत दिएको छ, जुन ट्रान्सजेन्डर समुदायविरुद्धको ठुलो हमला हो ।

-अमेरिकाको डिपार्टमेन्ट अफ गभर्मेन्ट इफिसियन्सी (म्भ्इबचतकभलत या न्खबभचकभलत भाष्अष्भलअथ) ले विभिन्न सरकारी एजेन्सीमा छरिएका डेटाहरूलाई केन्द्रीकृत रूपमा सङ्कलन गरेर निगरानीको लागि प्रयोग गर्ने योजना बनाइरहेको खबरसमेत बाहिरिएको छ । विभागका प्रमुख एलन मस्कले सुरुवाती दिनहरूमा सरकारी कर्मचारीहरूको विवरण खोजेर संकलन गर्ने काम गरेका थिए ।

यस्ता विविध कुराहरूले अमेरिकी नागरिकहरूलाई आफ्ना मानसिक र स्वास्थ्यसम्बन्धी कुराहरू एआई च्याटबटसँग शेयर गर्न झन् बढी प्रेरित गरिरहेको द भर्जमा प्रकाशित लेखमा उल्लेख छ । तर यहाँ बुझ्नुपर्ने कुरा के छ भने, अत्यधिक प्रयोगमा रहने च्याटबटहरू अमेरिकी सरकारसँग नजिकबाट काम गरिरहेका छन् ।

एलन मस्क त सरकारी कर्मचारी नै हुन् । जुकरबर्ग र ओपनएआईका साम आल्टम्यान पनि ट्रम्पको कृपामा रहन अनेक प्रयास गरिरहेको विश्लेषकहरू बताउँछन् । यी कम्पनीहरू सामान्य रूपमा मात्र लबिङ गर्दै छैनन्, तिनीहरूले ट्रम्पको विचारअनुकूल नीति बनाउँदै, सार्वजनिक रूपमा समर्थन जनाउँदै छन् । इन्टरनेटमा निगरानी कुनै नयाँ कुरा होइन, तर अब स्थिति भयावह बन्न थालेको छ । कम्पनीहरूले च्याटबटहरूमार्फत संवादकै शैलीमा संवेदनशील जानकारी झिक्ने खालको संरचना तयार गरिरहेका छन् । जब यस्ता जानकारी लीक हुन्छ, त्यो व्यक्तिको व्यक्तिगत जीवनमा ठुलो असर पार्न सक्छ । च्याटबटहरू गुगल सर्चजत्तिको पनि सुरक्षित नभएको विश्लेषकहरू बताउँछन् । अर्कोतिर, यो मेसेजिङ एपहरूजस्तो इन्क्रिप्टेड पनि हुँदैन । तपाईंले च्याटबटसँग गर्नुभएको हरेक कुरामा कम्पनीको सोझो पहुँच हुन्छ ।

अमेरिकी सरकारले यो निगरानीलाई "बालबालिकाको सुरक्षा" वा "आतंकवाद नियन्त्रण" जस्ता नारामा ढाक्न सक्ने सम्भावना पनि छ । तर वास्तविकता भने प्रस्ट छ- यो प्रक्रिया लोकतान्त्रिक अधिकार र व्यक्ति स्वतन्त्रताको उल्लङ्घन हो । विशेष जोखिममा परेका व्यक्तिहरूमा लिङ्ग पहिचानसम्बन्धी स्वास्थ्य सेवामा काम गर्ने डाक्टर, विश्वविद्यालयका कर्मचारी, सामाजिक मुद्दामा सक्रिय व्यक्ति लगायत रहेका छन् ।

यदि यस्तो होइन र कम्पनीहरू आफूलाई प्रयोगकर्ताको गोपनीयताप्रति सचेत भनेर चिनाउन चाहन्छन् भने उनीहरूले सबै संवेदनशील च्याटहरू इन्क्रिप्टेड राख्ने, कम्पनीको समेत पहुँच नहुने गरी काम गर्न सक्छन् ।

पछिल्लो समय नेपालमा पनि एआई च्याटबटको प्रयोग बढ्दै गइरहेको छ । नेपाल सरकार एआई नीति बनाउने तरखरमा छ । यस्तोमा नेपालमा पनि कुनै न कुनै प्रकारको नीति आउन सक्छ । जसले हाम्रो गोपनीयताको सुरक्षा प्रत्याभूत गर्दैन । भाग्यवश यस्तो नीति नआए पनि, एआई टुल जहाँको भए पनि हाम्रो डेटा सम्बन्धित कम्पनीको पहुँचमा हुन सक्छ भन्ने कुरालाई नकार्न सकिँदैन । यी सबै डेटा कुनै पनि बेला, कुनै पनि प्रयोजनका लागि प्रयोग हुन सक्छन् ।

आजको दिनमा एआई तपाईंको सहयात्री त बन्न सक्छ, तर यसले तपाईंका संवेदनशील डेटाहरूलाई कसरी प्रयोग गरिरहेको छ भन्ने विषयमा कुनै कुरा यकिनका साथ भन्न सकिँदैन । यस्तोमा आफैं सचेत भई एआई च्याटबटसँग कुन स्तरसम्मको कुरा गर्ने भन्ने ध्यान भने आफैंले राख्नु उचित हुन्छ ।

# संसारकै सबैभन्दा गरीब राष्ट्रपति पेपेको निधन



एजेन्सी । उरुग्वेका पूर्व राष्ट्रपति जोसे अल्बर्टो मुजिका कोर्डानो (पेपे मुजिका) को ९० वर्षको उमेरमा निधन भएको छ । सरल जीवनशैली र समाजवादी विचारधाराका प्रतीक मुजिकाको निधनले विश्व समाजवादी आन्दोलनले एक महत्वपूर्ण नेता गुमाएको छ ।

सन् २०१० देखि २०१५ सम्म उरुग्वेको राष्ट्रपतिको जिम्मेवारी सम्हालेका मुजिका 'संसारकै सबैभन्दा गरीब राष्ट्रपति' भनेर विश्वमा चर्चित थिए । उनले आफ्नो तलबको अधिकांश हिस्सा दान गर्ने गर्थे र राष्ट्रपति हुँदा पनि ग्रामीण इलाकामा रहेको सानो फार्म हाउसमा जीवन बिताएका थिए ।

छापामार लडाकुका रूपमा सक्रिय रहँदै उनी दर्जनौं गोलीका बाबजुद जीवित रहे । त्यसपछि उनलाई पक्राउ गरेर १२ वर्षसम्म कठोर एकान्त कारावासमा राखिएको थियो । यो समय उनका लागि अत्यन्त पीडादायक भए पनि उनले त्यहींबाट समाज, राजनीति र मानवताको गहिरो चिन्तन गरे ।

मुजिका ल्याटिन अमेरिकाको "गुलाबी लहर" भनेर चिनिने सन् २००० को दशकको वामपन्थी उदयका अग्रणी नेतामध्ये थिए । अर्जेन्टिना, ब्राजिल, चिली, बोलिभियालगायत देशहरूमा समाजवादी सरकार सत्तामा आउँदा उनी त्यस लहरको केन्द्रमा रहेका थिए ।

उनको निधनसँगै ल्याटिन अमेरिकी वामपन्थी राजनीति र विश्वव्यापी समाजवादी आन्दोलनले एक प्रतीक गुमाएको छ । सामाजिक समानता, न्याय र सादगीको जीवनशैलीप्रतिको उनको प्रतिबद्धता धेरैका लागि प्रेरणादायी रहेको छ ।

जोसे मुजिकाप्रति हार्दिक श्रद्धाञ्जली व्यक्त गर्दै विश्वभरका नेताहरू, सामाजिक कार्यकर्ता र सर्वसाधारणले उनको योगदानलाई स्मरण गरिरहेका छन् ।

# सिन्दूरको बोट, यसको निर्माणको रोचक यात्रा, विधि र फाइदाहरू

एजेन्सी । नेपाललगायत भारत तथा हिन्दु समाजमा हरेक विवाहित महिलाको मुख्य आभूषण सिन्दूर हो, जुन उनको सबैभन्दा खोजिने आभूषण हो । यसले महिलाहरूको सोह्र श्रृंगारमा विशेष स्थान मात्र राख्दैन, तर जब यसको माग हुन्छ, अनुहारको सुन्दरता दोब्बर हुन्छ । सिन्दूरलाई सिन्दूर भनिन्छ, जुन सामान्यतया मानव निर्मित हुन्छ र यसलाई सही अनुपातमा कागती, बेसार, पारा आदि मिसाएर तयार पारिन्छ । तर, के तपाईंलाई थाहा छ सिन्दूर पनि बिरुवाको बीउबाट बनाइन्छ ? यो जडिबुटी सिन्दूर हो । हर्बल सिन्दूर कसरी बनाइन्छ र यसको फाइदा के हो जानौं ।

हर्बल सिन्दूरको बारेमा रोचक तथ्यहरू

-जडिबुटी सिन्दूरको यो यात्राको कथा धेरै रोचक छ । सिन्दूरको रुखलाई अंग्रेजीमा कुमकुम रुख वा कमला रुख भनिन्छ । यो स्पर्ज परिवार, मेलोटस फिलिपिन्सिसको बिरुवा हो । यो बिरुवा दक्षिण अमेरिका, हिमाचल प्रदेश, भारतको महाराष्ट्रमा उम्रन्छ, त्यो पनि चुनिएका क्षेत्रहरूमा मात्र ।

-अन्य बोटबिरुवाहरू जस्तै, यो पनि एउटा यस्तो बोट हो जसको फलले पाउडर र तरल रूपमा सिन्दूर जस्तो रातो रंग उत्पादन गर्छ । धेरै मानिसहरू यसलाई तरल लिपस्टिक रुख पनि भन्छन् । एउटा बोटले एक पटकमा लगभग डेढ किलो सिन्दूर फलाउँछ । यसको मूल्य प्रति किलो १००० को हाराहारीमा छ ।

-सिन्दूर वा केमिलाको रुख २० देखि २५ फिट अग्लो हुन्छ । रुखको फलबाट बीउ निस्कन्छ । यी बीउहरूलाई पिसेर सिन्दूर बनाइन्छ । यो बिल्कुल स्वाभाविक हो । चम्किलो रातो रंग प्राकृतिक भएकोले निर्मातालाई कुनै हानि हुँदैन । यसमा कुनै मिसावट हुँदैन ।

-यस रुखका फलहरू गुच्छामा उम्रन्छन् । सुरुमा यो हरियो रंगको हुन्छ, तर पछि यो फल रातो रंगमा परिणत हुन्छ । यी फलफूल भित्र सिन्दूर हुन्छ । त्यो सिन्दूर साना अन्नको आकारमा हुन्छ, जसलाई पिसेर अन्य कुनै पनि चीजसँग नमिसाई सिधै प्रयोग गर्न सकिन्छ । यो शुद्ध छ र स्वास्थ्यको लागि पनि धेरै उपयोगी छ । यसको कुनै साइड इफेक्ट छैन । यो सिन्दूरलाई आवश्यकता पुरा गर्न र खानाका वस्तुहरूलाई रातो रंग दिन प्रयोग गर्न सकिन्छ ।

-यो हर्बल लिपस्टिक बनाउन पनि प्रयोग गरिन्छ । यो धेरै औषधिहरूमा पनि प्रयोग गरिन्छ । यो लिपस्टिक, कपालको रंग, नेल पालिस जस्ता धेरै कुराहरूमा प्रयोग गरिन्छ ।

-व्यावसायिक प्रयोग: रातो मसी बनाउन पनि प्रयोग गरिन्छ, रंगको लागि प्रयोग गरिन्छ, साबुनमा प्रयोग गरिन्छ । यो बिरुवा जहाँ रातो रङ प्रयोग गर्न सकिन्छ, त्यहाँ प्रयोग गरिन्छ ।

- यसलाई लागू गर्ने दुई तरिकाहरू छन् । दुवै धेरै परम्परागत र सामान्य छन् । पहिलो, बीउ रोप्न सकिन्छ र दोस्रो, तयार पारिएको बिरुवा काट्ने माध्यमबाट रोप्न सकिन्छ । सिन्दूरको बोट घरमा सजिलै उम्रन सक्दैन, किनकि यसलाई फरक प्रकारको हावापानी चाहिन्छ । यदि तपाईंले यसको बोटलाई धेरै पानी वा मल दिनुभयो भने, बोट फस्टाउन सक्नेछैन । यदि यसलाई घटाइयो भने, यसले फल दिनेछैन ।

-अफ्रिकन जर्नल अफ बायोमेडिकल रिसर्चमा प्रकाशित समाचार अनुसार, सिन्दूरको बोटमा एन्टी-ब्याक्टेरियल र एन्टी-फंगल गुणहरू हुन्छन् । यसको औषधीय गुणहरूको बारेमा प्रकाशित समीक्षा प्रतिवेदनमा भनिएको छ कि बीउबाट प्राप्त हुने आवश्यक प्राकृतिक रंग, जसलाई बिक्सिन भनिन्छ, खाद्य, औषधि, सौन्दर्य प्रसाधन र कपडा उद्योगहरूमा व्यापक रूपमा प्रयोग गरिन्छ । सिन्दूरको बोटको विभिन्न भागहरू झाडापखाला, ज्वरो, छालाको संक्रमण आदि जस्ता विभिन्न रोगहरूको उपचारमा प्रयोग गरिन्छ ।

# भक्तपुरका चारवटै नगरपालिका मनसुनजन्य विपदको पूर्वतयारीमा




भक्तपुर । जिल्लाका चारवटै स्थानीय तहलाई मनसुनजन्य विपदको पूर्वतयारी अवस्थामा रहन जिल्ला विपद व्यवस्थापन समितिको बैठकले निर्देशन दिएको छ । प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्यालको संयोजकत्वमा बसेको मनसुनजन्य विपद तयारी बैठकले भक्तपुर, सूर्यविनायक, चाँगुनारायण र मध्यपुर थिमि नगरपालिकालाई मनसुनजन्य विपदबाट हुनसक्ने क्षति र त्यसको राहत तथा खोज कार्यमा आवश्यक मनसुनजन्य दक्ष जनशक्ति, आवश्यक समाग्री तयारी अवस्थामा राख्न भनेको छ ।

साथै, बैठकले मनसुनजन्य विपदका लागि राहत तथा उद्दारका समाग्रीको तीन दिनभित्र जिल्ला दैवी प्रकोप उद्दार समितिलाई जानकारी दिने निर्णय समेत गरेको छ ।

मनसुन सुरु हुनै लाग्दा स्थानीयलाई आवश्यक सूचना दिने र मनसुनजन्य विपदबाट उच्च सतर्कता अपनाउन आग्रह गरिएको छ । बैठकले मनसुनजन्य पूर्वतयारी तथा कार्ययोजना २०८२ स्वीकृत गरी कार्यन्वयनमा लैजाने जनाएको छ । बैठकले सूचना संकलन, खोजी तथा उद्दारका लागि जिम्मेवार निकायले ताकिएको जिम्मेवारी पूरा गर्ने, सम्मन्वय र स्थलगत अध्ययनल गर्ने निर्णय गरेको प्रमुख जिल्ला अधिकारी अर्यालले बताए ।

गत वर्षको असोजमा आएको बाढी-पहिरोमा परी भक्तपुरको सूर्यविनायक नगरपालिकाको वडा नं. २, ८, र ९ मा गरी ४ जनाको मृत्यु भएको थियो । भक्तपुरको हनुमन्ते खोला उर्लेर आउँदा खोला आसपासका बस्ती, विद्यालय, अस्पताल जस्ता भवन डुबानमा परेका थिए ।

यस्तै, किसानले लगाएका तरकारी तथा अन्नबालीसमेत क्षति पुगेको थियो । मनोहरा खोलाका आसपासका क्षेत्र डुबानमा परेको थियो भने भक्तपुरका राधेराधे, जगाति, च्याम्हसिह सडक क्षेत्रसमेत हनुमन्त खोला पस्दा डुबानमा परेको थियो ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### शक्तिशाली राष्ट्रहरूको कारण विश्व सङ्कटोन्मुख !

हाल नेपालमा राजनीतिक संकट गहिरिदै गएको छ भने अर्को तर्फ विश्वमा बढ्दै गइरहेको प्रदुषणको कारण पनि नेपालको जैविक तथा प्राकृतिक स्रोत र साधन खतरामा रहेको छ । त्यस्तै अर्को तर्फ देशमा विकासको नाममा प्रकृतिक स्रोत र साधनको दोहन र विना पूर्वाधार र नीति विपरित वन जङ्गल र पहाडहरुको विनासका कारण प्रति प्राकृतिक प्रकोपका साथमा मनसुन जन्य विपतहरुको सामाना देशकै राजधानी रहेको काठमाडौंमा पनि देखिन थालेको छ । विगतमा बस्ती विकासको क्रममा प्राकृतिक रुपमा बहने नदीनालाहरु अतिक्रमण गरेर बनाइएका मानव निर्मित संरचनाहरुका कारण नदीहरु साँधुरिन गई बाढी र डुबानको समस्याले भौतिक मात्र होइन मानव क्षतीसमेत व्यहोर्नु परेको छ ।

यसका साथै विश्वमा बढ्दो तापक्रमको कारण हिमालमा हिउँ पग्लने क्रम बढ्दा सेता देखिने हिम श्रृंखलाहरु काला पत्थरमा परिणत भएका छन् भने हिमतालहरु पग्लनेक्रममै रहेको कारण नेपालमा सङ्कट पनि बढ्दै गएको छ । यसरी जलवायु परिवर्तनबाट बढी आक्रान्त मुलुकहरूमा एक भएर पनि नेपालले अन्तर्राष्ट्रिय समुदायमा स्पष्ट शब्दमा यो विषयलाई उठान गर्न सकेको थिएन ।

यसैका लागि 'जलवायु परिवर्तन, हिमाल र मानव जातिको भविष्य' विषय रहेको सगरमाथा संवाद आयोजना गर्ने निर्णय गरिएको थियो । अनेकौं व्यवधान पश्चात् गत शुक्रवार सुरु भएको सगरमाथा संवादको पहिलो संस्करण २५ बुँदे 'सगरमाथा कार्य आह्वान' जारी गर्दै आइतवार सम्पन्न भएको छ ।

हालै भारत र पाकिस्तान बीचको युद्धले समग्र दक्षिण एसियामा नै तनाव बढाएको थियो । तर भारत पाकिस्तानको संयमित व्यवहार र पश्चिमा मुलुकको समन्वयमा युद्ध रोकिएको छ । तर भारतीय मिडिया र नेपाल र भारतको हिन्दु अतिवादीहरु अझै पनि आतंकबादको नाममा युद्धको लागि उक्साइरहेको छ ।

नेपालमा सम्पन्न भएको सगरमाथा सम्वादमा समेटिएका लगभग सबै विषयहरू पहिले पनि विभिन्न अन्तर्राष्ट्रिय मञ्चहरूमा उठिसकेकै हुन् । विश्व तापमान वृद्धि नियन्त्रणलगायतका विषयमा यसभन्दा पहिले पनि विभिन्न कार्य योजनाहरूसमेत बनेका थिए । तर, केही शक्तिशाली राष्ट्रहरूले जिम्मेवारी वहन नगर्दा विश्व सङ्कटोन्मुख भएको हो । यसैले २५ बुँदे सगरमाथा कार्य आह्वानलाई पनि संसारका शक्तिशाली मुलुकहरू मूलतः विश्व तापक्रम वृद्धिका लागि जिम्मेवार प्रमुख राष्ट्रहरू अमेरिका, चीन, भारत, रुसले तत्काल गम्भीरतापूर्वक लिनेमा आशंका कायमै छ । तर, नेपाललगायतका अल्पविकसित पीडित राष्ट्रले आफ्नो पक्ष राख्न छाड्नु हुँदैन ।

तापमान वृद्धिलगायतका जलवायु परिवर्तनका प्रभाव संसारभर नै परेको छ तर अपेक्षाकृत रुपमा संवेदनशील र कमजोर राष्ट्रहरूमा यसको प्रभाव बढी नै परेको छ जसलाई थेग्न कठिन हुँदै गएको छ । यसैले सगरमाथा संवाद आयोजना गरेर नेपालले सुरु गरेको यो कार्य प्रशंसनीय नै छ

तर नेपालमा यस्ता सभा सम्मेलनहरू आयोजनालाई नै प्रगति र उपलब्धि ठान्ने परिपाटी रहेको छ । यही प्रवृत्तिका कारण गरिबी निवारण, जनवायु परिवर्तनजस्ता विश्वव्यापी सरोकार भएका विषयहरूमा नगण्य प्रगति र परिवर्तन भएको हो । सगरमाथा कार्य आह्वान पनि बिस्तारै विस्मृतिमा पर्ने जोखिम बढी नै छ । आह्वान कार्यान्वयन गर्न घचघच्याउने र संवादलाई निरन्तरता दिन संस्थागत व्यवस्था गर्ने विषयमा नेपाल सरकार गम्भीर बनोस् ।

# चुनौतीको चक्रव्यूहमा नेपाली अर्थतन्त्र

● रमेशकुमार बोहोरा

नेपालको अर्थतन्त्र अहिले अनेकौं घरेलु र बाह्य चुनौतीको दोहोरो चक्रव्यूहमा फसेको छ । महामारीपछिको पुनरुत्थान, वित्तीय अनुशासनको कमी, कर्जा वितरणको विकृति, र संस्थागत कमजोरीका कारण आर्थिक प्रणाली अस्तव्यस्त बनेको छ । अझ नियमनकारी संस्थाहरूको कमजोरीले लघुवित्त र सहकारी क्षेत्रहरूमा देखिएको अव्यवस्थाले अर्थतन्त्रमा गम्भीर संकट निम्त्याएको छ । कर्जाको अत्यधिक प्रवाह, त्यो पनि अनुत्पादक क्षेत्रमा, र सरकारी खर्चमा जवाफदेहिताको कमीले गर्दा आर्थिक वृद्धिमा अपेक्षित योगदान हुन सकेको छैन । निर्माण तथा सेवा क्षेत्रका भुक्तानी समस्याले निजी क्षेत्रको लगानी र रोजगारी सिर्जनामा नकारात्मक प्रभाव पारेको छ ।

**मौद्रिक नीतिमा धेरै भरोसा गरेपछिको असर**

विश्वका धेरै देशले कोरोनापछि वित्तीय र राजस्व नीतिको संयोजनमार्फत पुनरुत्थानको प्रयास गरे । तर नेपाल भने मौद्रिक नीतिमा मात्र निर्भर रह्यो । यो एकतर्फी दृष्टिकोणले अर्थतन्त्रमा आवश्यक ऊर्जा भरिन सकेन । आर्थिक सन्तुलन कायम राख्न अब बहुआयामिक नीति संयोजन अपरिहार्य देखिन्छ ।

**विश्वव्यापी संकट र नेपालमाथिको प्रभाव**

संयुक्त राष्ट्रसंघले हाल विश्वलाई 'पूर्ण आँधी'को अवस्थामा रहेको बताउँदा त्यसको असर नेपालमा खुला र आयातमा निर्भर अर्थतन्त्रमा झन् गहिरो रूपमा परेको छ । विश्वभर जलवायु अस्थिरता, द्वन्द्व, शरणार्थी संकट, सैन्य खर्चको वृद्धि र सामाजिक असमानताले आर्थिक स्रोतमा कटौती गरिरहेको छ । स्टकहोम पिस रिसर्च इन्स्टिच्युट अनुसार, २०२४ मा मात्र सैन्य खर्च ९.४ प्रतिशतले बढेर २.७ ट्रिलियन डलर पुगेको छ । यस्तो अवस्थामा स्वास्थ्य, शिक्षा र पूर्वाधारमा आवश्यक अन्तर्राष्ट्रिय लगानी घट्दै गएको छ ।

**वैदेशिक सहायता घट्दै जाँदा सिर्जिने समस्याहरू**

धनी देशहरूले वैदेशिक सहायता कटौती गर्दा नेपालमा यसको प्रत्यक्ष असर देखिन्छ । अमेरिकाले नेपालमा स्वास्थ्य क्षेत्रमा दिने भनिएको ९५ अर्बभन्दा बढीको सहायता रोकेको सन्दर्भमा देखिएझैं, दाताहरूको प्राथमिकता परिवर्तनले विकास योजनाहरू प्रभावित भएका छन् । ओइसिडीका अनुसार सन् २०२५ मा सहायता १७ प्रतिशतले झर्ने छ । यस्तो अवस्थामा घरेलु स्रोत परिचालनको प्रभावकारिता वृद्धि गर्नु, अनुदानको सट्टा ऋणद्वारा आउने सहायताप्रति सचेत रहनु अत्यावश्यक देखिन्छ ।

**अन्तर्राष्ट्रिय ऋणको बढ्दो प्रवृत्ति र जोखिम**

विकासशील देशहरूमा ऋणमार्फत सहयोग बढ्दो छ । सन् २०२१-२२ बीच अनुदान आठ प्रतिशतले घट्दा ऋण ११ प्रतिशतले बढेको तथ्यांकले यस्तो संकेत गर्छ । ऋणको बोझ बढ्दा ऋण सेवा खर्चमा जाने रकमले स्वास्थ्य, शिक्षा, पूर्वाधार विकासजस्ता क्षेत्र ओझेलमा परिरहेका छन् । नेपालको सन्दर्भमा पनि कूल गार्हस्थ उत्पादनको ४९ प्रतिशतभन्दा बढी ऋणको अनुपात पुगेको छ भने चालु वर्षको बजेटमा २२ प्रतिशतभन्दा बढी रकम ऋणको साँवाब्याज तिर्न छुट्ट्याइएको छ ।

**व्यापार युद्ध र विश्वव्यापी वित्तीय अस्थिरता**

अमेरिका-चीन व्यापार युद्ध, र अन्य राष्ट्रहरूबीचको भूराजनीतिक तनावले विश्व व्यापार प्रवाहलाई अस्थिर बनाएको छ । यस्तो अवस्थामा विकासशील मुलुकहरूको निर्यात क्षमतामा ह्रास आएको छ । विश्वबजारको अनिश्चितता, मुद्रा अवमूल्यन, लगानी प्रवाहमा रोकावटजस्ता समस्याले नेपाली अर्थतन्त्र प्रभावित हुँदै गएको छ । अन्तर ाष्ट्रिय मुद्रा कोषका अनुसार सन् २०२५ मा विश्वको आर्थिक वृद्धि केवल २.८ प्रतिशत रहने छ । यस्तो सुस्त अवस्थाले नेपालजस्ता देशका वित्तीय प्रवाह, विनिमय दर र आयात लागतमा गहिरो असर पार्ने छ ।

**जलवायु परिवर्तनको आर्थिक असर**

जलवायु परिवर्तनबाट नेपालको कूल गार्हस्थ उत्पादनमा वार्षिक १.५ देखि दुई प्रतिशतसम्मको क्षति भइरहेको छ । सन् २०५० को दशकसम्म यो घाटा तीन प्रतिशत पुग्ने प्रक्षेपण छ । धान, मकै, बाली उत्पादनमा गिरावट, बाढीपहिरोबाट पूर्वाधारको क्षति र पर्यावरणीय संकटले आर्थिक पुनर्निर्माणमा ठूलो बोझ थप्ने छ । जलवायु परिवर्तनले वित्तीय प्रणालीमा जोखिम बढाउने छ, जसले सरकारी र निजी दुवै लगानीमा असहजता ल्याउने सम्भावना छ ।

**दक्षिण एसियाली भूराजनीति र क्षेत्रीय आर्थिक निष्क्रियता**

भारत-पाकिस्तान द्वन्द्व र अन्तरक्षेत्रीय अविश्वासका कारण दक्षिण एसियाली क्षेत्रीय व्यापार केवल पाँच प्रतिशतमा सीमित छ । दक्षिणपूर्वी एसियामा यो अनुपात २५ प्रतिशतभन्दा बढी छ । यस्तै नीतिगत अड्चनले साझा पूर्वाधार निर्माण, मूल्य शृंखलामा सहकार्य, र क्षेत्रीय निर्यातमा विविधीकरणमा ठूलो अवरोध खडा गरेको छ । नेपालको अर्थतन्त्र यस्तो असहयोगी भूराजनीतिक घेराबाट पनि प्रभावित हुँदै आएको छ ।

**बजेट व्यवस्थापन र नयाँ सार्वजनिक व्यवस्थापनको आवश्यकता**

नेपालको बजेट निर्माण र कार्यान्वयन पद्धति परम्परागत ढर्रामा आधारित छ। उदाहरणस्वरूप, सन्१९८० को दशकमा न्युजिल्याण्डले अपनाएको परिणाममुखी बजेट प्रणाली आज पनि अन्तर ाष्ट्रिय अभ्यासमा अनुकरणीय मानिन्छ । यस ढाँचामा परिणामलाई प्राथमिकता दिइन्छ, नीति र कार्यान्वयनबीच स्पष्ट जिम्मेवारी बाँडफाँड हुन्छ, र वित्तीय पारदर्शितामा जोड दिइन्छ । नेपालको बजेटमा यस्ता अवधारणा अझै प्रभावकारी रूपमा कार्यान्वयन भएको छैन ।

**संरचनागत कमजोरी**

नेपालको आर्थिक विकासमा सबैभन्दा ठूलो अवरोध भनेको कम उत्पादकत्व र औद्योगिक क्षेत्रको खस्किँदो अवस्था हो । उत्पादन र रोजगारी सिर्जना गर्नुपर्ने समयमै ती क्षेत्रहरू सुस्त छन् । पर्यटन, कृषि, ऊर्जाजस्ता सम्भाव्य क्षेत्रहरूमा पूर्वाधार अभाव, नीति अस्पष्टता, र निजी क्षेत्रको सहभागिता न्यून छ । रेमिट्यान्समा निर्भरता पनि बढ्दो छ, जसले 'डच डिजिज' को खतरा बढाएको छ । यसले उत्पादन क्षेत्रमा लगानी घटाउँछ र आयातमुखी अर्थतन्त्र बनाउँछ ।

**वित्तीय क्षेत्रको जोखिम र नियमनको चुनौती**

नेपालको बैंकिङ क्षेत्रले खराब ऋण, कमजोर नियमन, र पारदर्शिताको अभावको समस्या खेपिरहेको छ । एफएटिएफले नेपालको नियमन प्रणालीलाई असन्तोषजनक मानेर 'ग्रे लिस्ट'मा राखेको छ । यसले अन्तर्राष्ट्रिय लगानीकर्ताको भरोसा गुमाउने र वित्तीय लेनदेनमा अवरोध ल्याउने खतरा बनाएको छ । एफएटिएफले औंल्याएका तीन मुख्य क्षेत्र- घरजग्गा वित्त, सीमापार रेमिट्यान्स, र असामान्य वित्तीय लेनदेनमा स्वचालित निगरानी प्रणाली आवश्यक छ । तर, नेपाल राष्ट्र बैंकको क्षमता अझै सुदृढ बनाइनु आवश्यक छ ।

**ऋणको व्यवस्थापन र खर्चको प्राथमिकता पुनरावलोकन**

विकास खर्चमा निकै ढिलाइ हुनु, बजेट खर्चको अधिकांश हिस्सा साधारण खर्चमा जानु र संघ-प्रदेश-स्थानीय तहबीच समन्वयको अभावले समग्र अर्थतन्त्रलाई कमजोर बनाएको छ । चालु खर्चमा ६५ प्रतिशत बजेट छुट्याइँदा पूर्वाधार विकासको सम्भावना सीमित हुन्छ । राजस्व वृद्धिका लागि कर प्रशासनमा सुधार, कर छुट नीतिमा पुनरावलोकन र आर्थिक क्षेत्रको औपचारिकता आवश्यक छ ।

**संघीयता र वित्तीय स्रोतको वितरण**

संघीयताको सफल कार्यान्वयनका लागि संघीय, प्रदेश र स्थानीय तहबीचको वित्तीय स्रोतको पारदर्शी वितरण आवश्यक हुन्छ । तर संघको स्रोत खुम्चिँदा प्रदेश र स्थानीय तहको वित्तीय स्वायत्तता संकुचित हुँदै गएको छ । यसले संघीय शासन प्रणालीप्रतिको जनविश्वास घटाउने सम्भावना छ ।

**समाधानका उपायहरू**

नीतिगत समन्वयः मौद्रिक, वित्तीय र औद्योगिक नीतिबीच समन्वय आवश्यक छ । परिणाममुखी बजेट प्रणालीः न्युजिल्याण्ड मोडलजस्तै पारदर्शी, जवाफदेही र परिणाममुखी बजेट ढाँचा अपनाउनुपर्छ । निजी क्षेत्रको परिचालनः लगानीमैत्री वातावरण सिर्जना गर्दै विदेशी र स्वदेशी निजी क्षेत्रलाई आकर्षित गर्नुपर्ने छ । संस्थागत सुधारः नियमनकारी संस्थाहरूमा दक्षता वृद्धि, स्वचालित निगरानी प्रणालीको स्थापना र एफएटिएफको मापदण्डअनुसार सुधार कार्यान्वयन आवश्यक छ ।

जलवायु वित्तः अन्तर ाष्ट्रिय जलवायु कोष र अनुकूलन कार्यक्रमहरूबाट थप स्रोत परिचालन गर्न कूटनीतिक प्रयास गर्नुपर्छ । संघीय वित्तीय प्रणाली सुदृढीकरणः स्पष्ट कार्यविभाजन, स्रोतको समुचित बाँडफाँड र वित्तीय अनुशासन अनिवार्य हुनुपर्छ । नेपालको अर्थतन्त्र चुनौतीको चक्रमा फसेको अवस्था हो । यसबाट निस्कन ठोस नीति, कार्यान्वयन क्षमताको सुधार, र समग्र आर्थिक संरचनामा पुनर्संरचना आवश्यक छ । बाह्य निर्भरता घटाउँदै उत्पादनशीलता र संस्थागत क्षमता विकासमा केन्द्रित भएर मात्र अर्थतन्त्रलाई पुनः लयमा ल्याउन सकिन्छ ।

(लेखक अर्थ सवाल साप्ताहिकका सम्पादक तथा नेपाल पत्रकार महासंघ काठमाडौं शाखाका सचिव हुन् )

# भक्तपुर नगरपालिकामा जनप्रतिनिधिहरुको तीन वर्ष
# (नगर प्रमुख सुनिल प्रजापतिको प्रतिवेदन)

आदरणीय नगरबासी दाजुभाइ तथा दिदीबहिनीहरू,

जनताको व्यापक साथ र समर्थनमा भक्तपुर नगरपालिकामा हामी निर्वाचित भई सपथ ग्रहण गरेको आज ३ वर्ष पूरा भयो । नेपालको संविधान अनुसार भएको स्थानीय तहको दोस्रो निर्वाचनपछि निर्वाचित भएर २०७९ साल जेठ ६ गते आजकै दिन हामीले कार्यभार सम्हालेका थियौं । त्यतिबेला सम्पूर्ण जनता र मतदाताबीच हामीले निर्वाचन घोषणापत्रअनुसार काम गर्ने प्रतिबद्धता व्यक्त गरेका थियौं । आजका दिनसम्म निर्वाचन घोषणापत्रलाई आधार बनाएर हामीले काम गर्दैछौं ।

संविधान र कानुनले दिएको अधिकारभित्र रहेर विभिन्न विकास निर्माण र अन्य कार्यहरुको अतिरिक्त हरेक वर्ष एउटा नगरस्तरीय महत्वपूर्ण योजना सम्पन्न गर्ने उद्देश्यअनुरुप हामी अघि बढिरहेका छौं । पहिलो वर्ष ख्वप अस्पतालको नयाँ भवन उद्घाटन र दोस्रो वर्ष 'भाज्या पुखु' उद्घाटन सम्पन्न गऱ्यौं । गत वर्ष आजकै दिन भनपा वडा नं. १० स्थित टेबुलटेनिस कभर्ड हल र ख्वप तिलगंगा आँखा अस्पतालको उद्घाटन गरेका थियौं । आज बिहान भनपा वडा नं. ४ गःहिटीस्थित लक्ष्मीनर सिंह मन्दिर पुनःनिर्माण सम्पन्न गरी नेपाल मजदुर किसान पार्टीका अध्यक्ष नारायणमान बिजुक्छेँ (रोहित) ज्यूबाट उद्घाटन सम्पन्न गऱ्यौं ।

दाजुभाइ तथा दिदीबहिनीहरु,

भक्तपुर कला र संस्कृतिले भरिएको प्राचीन नगर हो । यहाँका मूर्त र अमूर्त सम्पदाहरु हाम्रा अमूल्य सम्पत्ति हुन् । त्यसको संरक्षण र सम्बर्द्धन गरी भावी पुस्तालाई हस्तान्तरण गर्नु हामीले आफ्नो कर्तव्य र जिम्मेवारी ठानेका छौँ । त्यसको निम्ति हामी कला र संस्कृति संरक्षणमा निरन्तर लागिरहेका छौँ ।

नाचगानको राजधानी, सा“स्कृतिक नगर र जीवित संग्रहालयको रुपमा विश्वमा परिचित हुँदै गएको यस भक्तपुर नगरको नेतृत्व गरिरहँदा हामीलाई गर्वको महसुस भएको छ । हाम्रा अग्रजहरुले गर्नुभएको त्याग, परिश्रम र दुःखको परिणामस्वरुप भक्तपुर आजको अवस्थामा आइपुग्न सम्भव भएको हो । पदमा रहेर वा नरहेर पनि समाज परिवर्तनको लागि प्रत्यक्ष र परोक्ष योगदान गर्ने ती तमाम् अग्रज राजनैतिक नेता, कार्यकर्ता र सामाजिक कार्यकर्ताहरु एवं जनतालाई आजको दिन उच्च सम्मान व्यक्त गर्दछौँ ।

राजनीतिक दलका नेताहरु कल्पनाशील, देश र जनतामा समर्पित भए विकास छिटै सम्भव हुन्छ भन्ने एक उदाहरण भक्तपुर बन्दैछ । नेपाल मजदुर किसान पार्टीका अध्यक्ष का. नारायणमान बिजुक्छेँ (रोहित) ले लेख्नु भएको 'सय वर्षपछिको भक्तपुर' पुस्तक र १५ वर्षभित्र 'एक घर एक स्नातक' बनाउने घोषणा भक्तपुरको आर्थिक, साँस्कृतिक र सामाजिक रुपान्तरणको आधार र मार्गनिर्देशन बन्यो । त्यस पुस्तकले भक्तपुरको विकासको लागि कयौं वर्षसम्म मार्गनिर्देश गरिरहने हाम्रो विश्वास छ ।

स्थानीय तह प्रजातन्त्रको जग भएको हुँदा स्थानीय तह अधिकार सम्पन्न भए मात्र प्रजातन्त्र बलियो हुन्छ भन्ने मान्यताका साथ हामी अघि बढिरहेका छौँ । नयाँ संविधान कार्यान्वयनमा आएको १० वर्ष बितिसक्दा पनि संघीयता राम्रोस“ग कार्यान्वयनमा आउन सकेको छैन । कर्मचारी भर्नाको अधिकार स्थानीय तहलाई नहुनु, ससाना योजनाहरुसमेत संघ र प्रदेशको बजेटमा समावेश गर्नु, स्थानीय तहलाई दिने समानीकरण बजेट घटाउँदै लानु र स्थानीय तहबाट तलब खाने शिक्षकहरुमाथिको नियन्त्रण संघ सरकारमै कायमै राख्नु संघीयता कार्यान्वयनका चुनौतीहरु हुन् । भक्तपुर नगरपालिका ती सबै चुनौतीहरुबीच आत्मनिर्भरताको कठोर बाटो अवलम्बन गर्दै विकास पथमा अगाडि लम्किरहेको छ ।

हामीले हरेक वर्ष नीति तथा कार्यक्रम र बजेटमार्फत वार्षिक कार्ययोजना प्रस्तुत गर्दै आएका छौँ । चालु आ.व. २०८१।८२ को नीति तथा कार्यक्रम २०८१ असार ७ गते र बजेट असार १० गते प्रस्तुत गरी पारित बजेटको आधारमा हामीले काम गर्दै आएका छौँ । देश र जनताको इमानदारीपूर्वक सेवा नै राजनीति हो भन्ने मान्यतालाई आत्मसात गर्दै जनप्रतिनिधिहरुको क्षमताले भ्याएसम्म भक्तपुरको शिक्षा, स्वास्थ्य, सरसफाइ, सम्पदा संरक्षण, विकास निर्माणलगायतलाई उच्च प्राथमिकतामा राखेर कार्य गर्दै आएका छौँ । आ.ब. २०८१।८२ मा नगरपालिकाले गरेका गतिविधिहरुबारे संक्षेपमा जानकारी गराउन चाहन्छौं ।

आयतर्फ :

चालु आ.व. २०८१।०८२ मा आन्तरिकतर्फ रु. ६५ करोड ८३ लाख १० हजार र बाह्य स्रोततर्फ रु. १ अर्ब ८० करोड २२ लाख १८ हजार तथा गत वर्षको बा“की मौज्दात रु. २० करोड ३७ लाख ८२ हजार गरी कुल रु. २ अर्ब ६६ करोड ४३ लाख १० हजार स्रोत अनुमान गरिएकोमा चालु आ.व. २०८१।०८२ को १० महिनामा कूल आन्तरिक आय रु. ४४ करोड ९५ लाख ३५ हजार राजस्व सङ्कलन भएको छ । उक्त रकम चालु आ.व.को लक्ष्यको ६८ प्रतिशत हो । गत वर्षको सोही अवधिको तुलनामा आन्तरिक आयमा रु. ४ करोड २ लाख ३५ हजारले वृद्धि भएको छ । यो गत वर्षको तुलनामा १० प्रतिशतले वृद्धि हो । व्यवसाय कर सङ्कलन र दर्ताका लागि कर टोलीको परिचालन, भक्तपुर औद्योगिक क्षेत्रका कर नतिर्ने उद्योगहरूलाई कारबाही गरी करको दायरामा ल्याइएको हुँदा गैर पर्यटनबाट उठ्ने राजस्व वृद्धि भएको हो । त्यसैगरी पर्यटन शुल्कबाट उठ्ने राजस्व पनि गत वर्षको तुलनामा वृद्धि भएको छ ।

नेपाल सरकारबाट राजस्व बा“डफा“डतर्फ चालु आ.व.मा रु. ६ करोड ८९ लाख ६८ हजार त्यसैगरी वित्तीय समानीकरण, सशर्त, समपूरक र विशेष अनुदान गरी जम्मा ४६ करोड २७ लाख ५१ हजार, मालपोत रजिष्ट्रेशनबाट रु. २ करोड ५८ लाख ९३ हजार प्राप्त भएको छ । बाग्मती प्रदेश सरकारबाट यसै आ.व. मा वित्तीय समानीकरण, सशर्त, समपूरक र विशेष अनुदान गरी जम्मा रु. १५ करोड ६५ लाख ५५ हजार रुपैया“, सवारी करको राजश्व बा“डफा“डबाट रु. १ करोड ६८ लाख ८२ हजार प्राप्त भएको छ । यसरी आन्तरिक र बाह्य गरी कुल रु. २ अर्ब ६६ करोड ४३ लाख १० हजार आय अनुमान गरिएकोमा २०८२ वैशाख मसान्तसम्म कुल रु. १ अर्ब ६७ करोड २३ लाख ३३ हजार प्राप्त भई अनुमानित आयको ६३ प्रतिशत प्रगति भएको छ ।

व्ययतर्फ :

चालु खर्चतर्फ रु. १ अर्ब ५७ करोड ३ लाख ५३ हजार विनियोजित रकममध्ये २०८२ वैशाख मसान्तसम्म रु. ९२ करोड ४६ लाख ७० हजार खर्च भई विनियोजित रकमको ५८।८८ प्रतिशत, पू“जीगत खर्चतर्फ विनियोजित रकम रु. ९९ करोड ४० लाखमध्ये ३५ करोड ७१ लाख ९० हजार खर्च भई ३६ प्रतिशत प्रगति भएको छ । वित्तीय व्यवस्थातर्फ १० करोड विनियोजितमध्ये सोही अवधिसम्म रु. ६ करोड २८ लाख ५४ हजार खर्च भई विनियोजित रकमको ६२।८५ प्रतिशत खर्च भएको छ । यसरी चालु, पुँजीगत र वित्तीय व्यवस्थातर्फ कुल विनियोजित रु. २ अर्ब ६६ करोड ४३ लाख ५३ हजारको ५०।४७ प्रतिशत वित्तीय प्रगति भएको छ ।

शिक्षा :

भक्तपुर नगरपालिकाले कम शुल्कमा गुणस्तरीय शिक्षा प्रदान गर्ने उद्देश्यले खोलेका २ वटा इन्जिनियरिङ कलेजसहित ७ वटा शैक्षिक संस्थाहरूमा ७७ जिल्लाका ७ हजारभन्दा बढी विद्यार्थीहरू अध्ययनरत छन् । नगरपालिकाले शिशुस्याहार केन्द्रदेखि स्नातकोत्तर तहसम्म जनताका छोराछोरीहरूलाई शिक्षा प्रदान गर्दै छ । ख्वप विश्वविद्यालयको स्थापनाको लागि हामीले निरन्तर जोड दिँदैछौं ।

ख्वप इन्जिनियरिङ कलेजमा बि.सं. २०५८ देखि २०८२ सालसम्ममा ७७ जिल्लाबाट ५ हजार २६५ विद्यार्थीहरु कलेजमा भर्ना भएका छन् । भक्तपुर जिल्लाबाट सबैभन्दा धेरै (२ हजार ६३) जना विद्यार्थीहरु भर्ना भएका छन् । छात्राको सहभागिता उल्लेखनीय रुपमा बढेको छ । हाल अध्ययनरत विद्यार्थीमध्ये करिब ३९।५ प्रतिशत छात्रा रहेका छन् ।

ख्वप इन्जिनियरिङ कलेजका सबै स्नातक तहका कार्यक्रमहरुलाई नेपाल इन्जिनियरिङ काउन्सिलद्वारा यस वर्ष स्थायी मान्यता प्रदान गरिएको छ । यो उपलब्धि नेपाल इन्जिनियरिङ काउन्सिलले तोकेको मुख्य मूल्यांकन क्षेत्रहरुमा कलेजको उत्कृष्ट प्रदर्शनको परिणामस्वरुप प्राप्त भएको हो ।

पूर्वाञ्चल विश्वविद्यालयबाट स्नातक तह कम्प्युटर एप्लिकेशन (४८ सिट) र इन्फरमेशन टेक्नोलोजी (४८ सिट) को सञ्चालनको लागि स्वीकृति प्राप्त भइसकेको छ र यसै शैक्षिक सत्रबाट यी विषयहरु सञ्चालनमा आउने छन् । यी विषयहरु सञ्चालनसँगै क्याम्पसको शैक्षिक दायरा थप फराकिलो हुने र प्रविधि क्षेत्रमा दक्ष जनशक्ति उत्पादन गर्ने हाम्रो लक्ष्य हो ।

यस कलेजमा स्नातकोतर तह, एम.ई. इन अर्थक्वेक इन्जिनियरिङ कार्यक्रमकी विद्यार्थी मेधास्मी खतिवडाले ३.८८ सी.जी.पी.ए. सहित आफ्नो अध्ययन पूरा गरेकी छिन् र पूर्वाञ्चल विश्वविद्यालयको १३ औं दीक्षान्त समारोहमा विश्वविद्यालय स्वर्ण पदक, स्वर्गीय डिल्ली बहादुर अधिकारी स्वर्ण पदक र नारायण प्रसाद कोईराला स्वर्ण पदक गरी तीन प्रतिष्ठित स्वर्ण पदकहरूबाट सम्मानित भएकी छिन् ।

साथै, २०७५ सिभिल समूहका विकास पाण्डे पूर्वाञ्चल विश्वविद्यालयको १३ औं दीक्षान्त समारोहमा स्नातक तहको सिभिल समूहमा उत्कृष्ट प्रदर्शन गरेबापत डा. राम शोभना पोखरेल स्वर्ण पदकबाट सम्मानित भएका छन् ।

ख्वप इन्जिनियरिङ कलेज र ख्वप कलेज अफ इन्जिनियरिङको संयुक्त आयोजनामा दुईवटा राष्ट्रिय सम्मेलनहरू सफलतापूर्वक सम्पन्न भइसकेका छन् । राष्ट्रिय भूकम्प सुरक्षा दिवसको अवसरमा, चौथो राष्ट्रिय भूकम्प इन्जिनियरिङ सम्मेलन २०८१ माघ ५ गते सम्पन्न भयो । त्यस्तैगरी, विश्व सम्पदा दिवसको अवसरमा चौथो राष्ट्रिय सम्मेलन-वास्तुकलाका प्रवृत्ति र सम्पदा २०८२ बैशाख १५ गते सम्पन्न भएको थियो । २०८२ माघ महिनामा भूकम्प इन्जिनियरिङ तथा विपद-पश्चात् पुनःनिर्माण योजना बिषयक चौथो अन्तर्राष्ट्रिय सम्मेलन गर्ने तयारी भइरहेको छ ।

ख्वप कलेज अफ इन्जिनियरिङमा स्थापना कालदेखि हासम्म २७६९ विद्यार्थी भर्ना भई अध्ययन गरेकोमा हालसम्म १५६४ विद्यार्थीहरुले अध्ययन पूरा गरिसकेका छन् । यो वर्ष ख्वप कलेज अफ इन्जिनियरिङ स्नातक तह सिभिलका विद्यार्थी गौरव भुषालले सिभिल बिषयमा त्रिभुवन विश्व विद्यालय प्रथम भइ कलेजको नाम उच्चो बनाएका छन् । ख्वप कलेज अफ इन्जिनियरिङ विश्व विद्यालय अनुदान आयोगबाट क्यूएए प्राप्त गर्ने प्रकृयामा छ ।

ख्वप बहुप्राविधिक अध्ययन संस्थान प्रमाणपत्र तह नर्सिङ्ग विषयमा शैक्षिक वर्ष २०८१/८२ सम्म जम्मा ८०० जना विद्यार्थीहरु भर्ना भएकोमा ६७५ जना विद्यार्थीहरु उत्तीर्ण भई आफ्नो कार्य क्षेत्रमा कार्यरत छन् भने ३ समूह अर्थात ११९ जना विद्यार्थीहरु अध्ययनरत छन् ।

यस अध्ययन संस्थानमा नर्सिङ्ग तेश्रो वर्षमा अध्ययनरत विद्यार्थीहरुको २०८१ भाद्र महिनामा सम्पन्न दोस्रो वर्षको परीक्षामा ३९ जना विद्यार्थीहरु समावेश भएकोमा ३६ जना (९२.३१५) विद्यार्थीहरु विशिष्ट श्रेणीमा र ३ जना विद्यार्थीहरु प्रथम श्रेणीमा उत्तीर्ण भएका छन् । त्यस्तै डिप्लोमा इन सिभिल इन्जिनियरिङ्ग विषयमा शैक्षिक वर्ष २०७९/८० सम्म जम्मा ८७० जना विद्यार्थीहरु भर्ना भएकोमा हालसम्म ५६५ जना विद्यार्थीहरु उत्तीर्ण भैसकेका छन् ।

यस अध्ययन संस्थानमा थप प्राविधिक शिक्षा प्रदान गर्न मिति २०७९/०७/१५ गते सामान्य चिकित्सा(एच. ए.), फार्मेसी, रेडियोग्राफी र ल्याव टेक्निसियन विषयहरु संचालन गर्न सम्बन्धन स्वीकृतिको लागि प्रस्ताव पेश गरेकोमा मिति २०८१ चैत्र १७ गते प्रथम चरणको स्थलगत निरीक्षण सम्पन्न भई स्वीकृतिको चरणमा रहेको छ ।

ख्वप कलेज अफ ल सञ्चालन प्रारम्भ भएको ३ वर्ष भयो । यस अवधिमा वर्षको ६० जनाको दरले १८० जना विद्यार्थीहरु अध्ययनरत छन् । यो वर्षको परीक्षामा ख्वप कलेज अफ लको विद्यार्थीहरु ९७ प्रतिशत परीक्षामा उत्तीर्ण हुन सफल भएका छन् । यस कलेजमा ४२ जिल्लाका विद्यार्थीहरु अध्ययनरत छन् ।

ख्वप मा.वि.मा कक्षा ११ र १२ गरी हाल ३ हजार ७ सयभन्दा बढी विद्यार्थी अध्ययनरत छन् । कलेजबाट विज्ञान, मानविकी, व्यवस्थापन र कानुन गरी हालसम्म २५ हजार ५३३ जना विद्यार्थीहरुले अध्ययन गरिसकेका छन् । हरेक वर्ष रु. १ करोड ३० लाख भन्दा बढी रकम छात्रबृत्ति वितरण गरेका छौ ।

त्यस्तै २०८२ जेठ ८ र ९ गते ख्वप कलेजको आयोजनामा वातावरण, सुशासन र दिगो विकास बिषयक चौथो राष्ट्रिय सम्मेलन हुँदैछ ।

भक्तपुर नगरपालिकाले सामुदायिक विद्यालयको शैक्षिक सुधार र भौतिक निर्माणको लागि रु ५१ लाख र नेपाल सरकारको सशर्त बजेटअन्तर्गत जम्मा रू.३ करोड ८६ लाख गरी यो वर्ष ४ करोड ३७ लाख रुपैया“ विद्यालयहरुलाई आर्थिक सहयोग प्रदान गरेको छ ।

स्वास्थ्यः

भक्तपुर नगरपालिकाले १०० शैय्याको ख्वप अस्पताल सञ्चालन गर्दै आएको छ । त्यसैगरी श्वासप्रश्वास पुनःस्थापना केन्द्र, जनस्वास्थ्य केन्द्र, सहरी स्वास्थ्य केन्द्र र आधारभूत स्वास्थ्य केन्द्रहरूमार्फत स्वास्थ्य सेवा प्रदान गर्दै आएको छ । ख्वप अस्पतालले वर्षको ३६५ दिन ११ घण्टा ओपिडी सेवा प्रदान गर्दैछ ।

चालू आ.व. २०८१/८२ को बितेको १० महिनामा ७४ जिल्लाका २ लाख ३३ हजार ६३३ जना बिरामीलाई सेवा प्रदान गरिसकेको छ । हाल ख्वप अस्पतालमा चिकित्सक, नर्स र कर्मचारीहरू गरी कूल २३५ जना जनशक्ति कार्यरत छन् भने विशेषज्ञ चिकित्सक ३५ र मेडिकल अधिकृत १८ जनाले सेवा प्रदान गरिरहेका छन् । चालु आ.व. २०८१।८२ मा ख्वप अस्पतालमा युरोलोजी सेवा (मुत्र थैली), नेफ्रोलोजि सेवा (मृगौला), एन.पि.एल. सेवा (नाक, कान घाँटीको इन्डोस्कोपी), कोल्पोस्कोपी सेवा, ल्याप्रोस्कोपी सेवाहरु थप गरिएका छन् ।

२०८१ जेठ ६ गते, नेपाल मजदुर किसान पार्टीका केन्द्रीय अध्यक्ष श्री नारायणमान बिजुक्छेँबाट उद्घाटन गर्नु भएको ख्वप तिलगंगा आँखा अस्पतालले १० महिनामा २४ हजार ५५४ जना आ“खाका बिरामीहरूको उपचार गऱ्यो भने सोही अवधिमा ८८६ वटा आँखाको अपरेसन गरिसकेको छ । यस अवधिमा आयुर्वेदिक स्वास्थ्य सेवा केन्द्रबाट २ हजार ७६३ जनाले स्वास्थ्य उपचार प्राप्त गरे भने घरदैलो नर्सहरूले २३ हजार ५०६ घरधुरी गरी जम्मा ७० हजार ४७ जना जनतासँग सम्पर्क गरी सामान्य स्वास्थ्य सेवा प्रदान गरेको रेकर्ड छ ।

यस अवधिमा नगरपालिकाले नगरबासीहरूलाई ११ हजार ३७७ वटा सिलिन्डर अक्सिजन निःशुल्क वितरण गऱ्यो भने नगरबासीहरुलाई निःशुल्क रगत उपलब्ध गरे बापत १५ लाख ६ हजार रुपैयाँ भुक्तानी गरेको छ । कडा रोग लागेका १८९ जनालाई यस आर्थिक वर्षमा प्रति व्यक्ति रु. १५ हजारका दरले २८ लाख ३५ हजार सहयोग उपलब्ध गराइएको छ ।

नगरपालिकाले नगरबासीहरूको स्वास्थ्यलाई ध्यानमा राखेर नियमित रुपमा वडा वडामा पाठेघरको मुख परीक्षण (प्याप स्मेयर) तथा स्तन क्यान्सर, नाक कान घाँटी, हाडजोर्नी, नशा रोग तथा आँखा जाँचसम्बन्धी निःशुल्क शिविरहरू सञ्चालन गर्दै आएको छ ।

सम्पदा संरक्षण :

सम्पदा संरक्षणलाई नगरपालिकाले प्राथमिकता दिएर काम गरिरहेको छ । चालु आ.व. को १० महिनामा मठ १, मन्दिर जीर्णोद्धार ४, पाटी ४, द्योछेँ पुनःनिर्माण/मर्मत ३, पोखरी १, इनार १, ढुंगेधारा संरक्षण १ र अन्य निर्माण गरी १६ वटा सम्पदा पुनःनिर्माण र जिर्णोद्धार सम्पन्न भयो भने त्यसको लागि रु.४ करोड ८५ लाख ३३ हजार खर्च भएको छ । त्यसैगरी ढुंगेधारा १, मठ १, मन्दिर जीर्णोद्धार ३, पाटी ९, द्योछेँ पुनःनिर्माण/मर्मत २, पोखरी ५ र अन्य निर्माण २ गरी संख्या २३ वटा सम्पदाहरु पुनःनिर्माण तथा जिर्णोद्धार हुने क्रममा छ । यसरी चालु तथा सम्पन्न गरी कूल संख्या ३९ सम्पदाको जम्मा कूल खर्च ५ करोड ६१ लाख ९७ हजार खर्च भएको छ ।

पुरानो नगर क्षेत्रभित्र निजी घर र सम्पदा पुनःनिर्माणको लागि माटो जोडाइलाई जोड दिँदैछौं । प्रसिद्ध थन्थु दरबार, भनपा ९ दत्तात्रयस्थित पुजारी मठ, भनपा ६ स्थित छुमा गणेश द्योछेँलगायतका सम्पदाहरू माटो जोडाइबाट निर्माण गर्दैछौं । छुमा गणेश द्योछेँ पुनःनिर्माण सम्पन्न भइसकेको छ भने इखालाछी मठ, हाडाछेँलगायतका सम्पदाहरू यसै वर्ष सम्पन्न हुनेगरी कार्य भइरहेको छ ।

गाईजात्राको समयमा प्रस्तुत हुने विभिन्न सांस्कृतिक विधाहरूलाई प्रतियोगितात्मक मूल्यांकन गरी पुरस्कृत गर्दै आएका छौं । टोल टोलमा कार्यरत सांस्कृतिक गुरुहरूको सम्मान गर्ने नीतिअनुसार चालु आ.व.मा वर्षमा २२ जना सांस्कृतिक गुरुहरूलाई सम्मान गरियो ।

२०८२ बैशाख १२ र १३ गते भ.न.पा. र पुरातत्व विभागको संयुक्त आयोजनामा २०७२ सालको भूकम्प पश्चात पुनःनिर्माणको एक दशकको पुनरावलोकन कार्यक्रम र अन्तर्राष्ट्रिय वैज्ञानिक समिति (काठमाडौं उपत्यका विश्व सम्पदा क्षेत्र) को बैठक भक्तपुरमा सम्पन्न भयो ।

पर्यटन :

चालु आ.व.को १० महिनामा गैर सार्कतर्फ १ लाख १८ हजार ७५४ जना तथा सार्क र चिनियाँतर्फ ९३ हजार ३२१ गरी जम्मा २ लाख १२ हजार ७५ जना पर्यटकले भक्तपुरको अवलोकन भ्रमण गरिसकेका छन् । गत आ.व.को श्रावणदेखि बैशाखसम्म १० महिनामा गैर सार्कतर्फ १ लाख ७ हजार १३१ जना र सार्क र चिनियाँतर्फ १ लाख ३ हजार २१ गरी जम्मा २ लाख १० हजार १५२ जना पर्यटकले भक्तपुर अवलोकन भ्रमण गरेका थिए । गत वर्षको तुलनामा सोही अवधिमा यो वर्ष १ हजार ९२३ जना पर्यटक वृद्धि भएको छ ।

२०८१ मंसिर २८ देखि पुष २ गतेसम्म भक्तपुर महोत्सव सम्पन्न भयो । विभिन्न ३२ वटा विधाहरु प्रस्तुती रहेको उक्त महोत्सव आन्तरिक र बाह्य गरी लाखौं पर्यटकहरुले अवलोकन गरेका थिए ।

२०८१ माघ ५ गते नेपाल भ्रमण वर्ष २०२५

**बाँकी पेज ६ मा**

## भक्तपुर....

घोषणा तथा चिनियाँ नयाँ वर्ष २०२५ को शुभारम्भ कार्यक्रम भक्तपुरमा भव्यताका साथ सम्पन्न गरियो । यस वर्ष चिनियाँ पर्यटकहरु बृद्धी हुने अपेक्षा छ ।

खेलकुद

भक्तपुर नगरव्यापी विद्यालयस्तरीय खेलकुद प्रतियोगिता २०८१ सम्पन्न भयो । नगरपालिकाले फुटबल, भलिबल, बक्सिङ, जिम्नाष्टिक, करा“ते र टेबुलटेनिसको नियमित प्रशिक्षणलाई निरन्तरता दिंदै आएको छ । साथै पूर्णकालीन खेलकुद प्रशिक्षकको व्यवस्था गरी नगरक्षेत्रका विद्यालयहरूमा नियमित खेलकुद प्रशिक्षण र टोल टोलमा शारीरिक व्यायाम प्रशिक्षण पनि गर्दै आएको आएको छ ।

नगरपालिकाको आयोजनामा २०८१ चैत्र २३ गतेदेखि चैत्र २५ गतेसम्म तीनदिने अन्तर नगर जिम्नाष्टिक प्रतियागिता सम्पन्न भयो । यसै वर्ष राष्ट्रपति रनिङशिल्ड खेलकुद प्रतियोगिता पनि गरेका थियौं । ती प्रतियोगिताहरुमा भक्तपुर नपाले जित हासिल गर्यो । भक्तपुर नगरभित्रका संस्थागत तथा सामुदायिक विद्यालयका शिक्षक शिक्षिकाहरुलाई आधारभूत प्रशिक्षण तालिम सञ्चालन गर्दै आएका छौं ।

नगरपालिकाको आयोजनामा २०८१ कार्तिक ९ गतेदेखि १५ गतेसम्म भक्तपुर नगरव्यापी विद्यालयस्तरीय टेबुलटेनिस, भलिबल, फुटबल, कबड्डी, खोखो, एथ्लेटिक्स, बुद्धिचाल, ब्याडमिन्टन, कराँते, उसु, तेक्वान्डो, पोर्टबल, जिम्नाष्टिक, कसिमला पाँय् र बाघचाल खेल प्रतियोगिता सम्पन्न भयो ।

भक्तपुर नपाले टोल–टोलमा खुला व्यायामशालाहरूको व्यवस्था गर्दै आएको छ । विभिन्न राष्ट्रिय र अन्तर्राष्ट्रिय खेलहरूमा पदक जित्ने खेलाडीहरूको मनोबल बढाउन यसै वर्ष २०८२ जेठ १५ गते खेलाडी सम्मान गर्ने कार्यक्रम छ ।

वातावरण र सरसफाइ :

नगरका महत्वपूर्ण सम्पदा स्थल, खुल्ला क्षेत्र, खोला, पोखरीलगायतका सार्वजनिक स्थलहरुमा नगरपालिकाका जनप्रतिनिधिहरु, कर्मचारी र स्थानीय जनताको सहभागितामा हरेक महिनाको १ र १५ गते सर–सफाई कार्यलाई निरन्तरता दिंदै आएका छौं । घर घरबाट निस्कने फोहरलाई कुहिने र नकुहिने फोहरमा वर्गीकरण गरी अलग अलग संकलन गर्न बाल्टिन वितरण तथा घर दैलोमा फोहर संकलन गर्न ट्राइसाइकलको व्यवस्था गरिएको छ ।

कृषि :

कृषि चुन ५० प्रतिशत अनुदानमा तथा नगरपालिकाद्वारा उत्पादित २० के.जीको १ बोरा कम्पोष्ट मल सहुलियत दरमा वितरण गर्दै आएका छौं । किसानहरूले उत्पादन गरेको तरकारी सहज बिक्री वितरणका लागि भक्तपुर नपा ५ भेलुखेलमा तरकारी बजारको व्यवस्था र कृषि उत्पादनहरू भण्डारण गर्न भनपा ८ लिबालीमा चिस्यान केन्द्र निर्माण भइरहेको छ । किसान सूचिकरण कार्यक्रमअन्तर्गत हालसम्म ४ हजार २२५ कृषक घरधुरी किसान सूचिकरण प्रणालीमा सूचिकृत गरिएको छ ।

चालु आ.व. मा २ हजार ७६६ वटा कुकुरलाई रेबिज खोप, कुकुर बन्ध्याकरण ५१३ वटा, घर पालुवा र सामुदायिक कुकुर रेबिज खोप १ हजार ३१४ र अन्य पशुपंक्षीलाई उपचार सेवा प्रदान गरेको छ ।

युवा र आत्मनिर्भरता :

स्थानीय युवाहरूलाई सीप सिकाई आत्मनिर्भर बनाउन सिलाइ मेसिन मर्मत तालिम, ग्यास चुल्हो मर्मत तालिम, हेयर कटिङ तालिम, आधारभूत र एडभान्स पाक शिक्षा तालिम, आधारभूत र एडभान्स सिलाई तालिममा यस आ.व.मा ५१६ जना भन्दा बढी नगरवासीहरुले तालिम प्राप्त गरेका छन् ।

भाषा तालिमलाई पनि निरन्तरता दिंदै जापानी भाषा र चिनियाँ भाषाका कक्षा सञ्चालन गरिरहेका छौं । चालू वर्षमा जम्मा १७ जना विद्यार्थीहरूले जापानी भाषा र ३० जना विद्यार्थीले चिनियाँ भाषा अध्ययनरत छन् ।

भक्तपुर नगरपालिकाले युवाहरूलाई स्वरोजगार बनाउन रु. ५ लाखसम्म युवा उद्यमशीलता ऋणको व्यवस्था गरेको छ । गरिवी निवारणको लघु उद्यम विकास कार्यक्रम अन्तर्गत सञ्चालित बेकरी, मखमली जुत्ता बनाउने र पेपर रिसाइक्लिङ तालिम प्रदान गरेका छौं ।

लघु उद्यम विकास कार्यक्रमअन्तर्गत नगरभित्रका १० वटै वडाका बेरोजगार युवाहरूलाई ११ दिने उद्यमशीलता विकास तालिम सम्पन्न भयो भने आधारभूत छालाको जुत्ता बनाउने, ब्याग/झोला बनाउने, मोवाइल मर्मत र मोटरसाइकल मर्मतसम्बन्धी सीप विकास तालिम संचालन भइरहेको छ । साथै लघु उद्यमीहरूको स्तरोन्नतिको लागि एडभान्स बेकरी, मखमली जुत्ता, र सिकर्मी (काष्ठकला) सम्बन्धी सीप विकास तालिम सञ्चालन भइरहेको छ ।

सहकारी :

सहकारी सञ्चालकहरू जनताको बचत रकम लिएर भाग्ने क्रम बढेको हुँदा नगरभित्रका सहकारीहरूमा त्यस्तो समस्या नआओस् भनी समय समयमा सूचना प्रवाह, भेलाहरू बोलाइ सचेत पार्दैछौं । समस्या हुने सम्भावना देखिएका सहकारीहरूमा अनुगमन गरी सुधार्ने प्रयास गर्दैछौं । कतिपय सहकारीका सञ्चालकहरूको सम्पत्ति रोक्का गरी जनताको बचत फिर्ता गर्न सक्दो प्रयास गर्दैछौं ।

देको मिवा इतापाके आवास योजना :

भक्तपुर नगरपालिकाद्वारा सञ्चालित देको मिवा इतापाके जग्गा एकीकरण आयोजना १६५४ रोपनी जग्गामा सञ्चालन भइरहेको छ । कूल कित्ता संख्या २५०२ मध्ये हालसम्म १०४३ वटा पूर्जा वितरण भइसकेको छ । आयोजनामा पूर्वाधार निर्माणका कामहरू पनि भइरहेका छन् । खोलाको बाटोलगायत मुख्य मुख्य बाटो पिच गर्ने कार्य सम्पन्न हुने क्रममा छ । जग्गाधनीको केही गुनासाहरुबारे समन्वय गरी समाधानका प्रयासहरु भइरहेका छन् । गुठी जग्गा र खोलाको मापदण्डको समस्या समाधानको लागि प्रयासरत छौं ।

विकास निर्माण :

भक्तपुर नपा वडा नं. ६ देकोचामा नगरको गौरवको योजना अरनिको सभा भवनको दोश्रो चरणको निर्माण कार्य भइरहेको छ भने भनपा वडा नं. ७ ख“चामा स्वास्थ्य चौकी निर्माण, ख्वप टेलिभिजन स्टुडियो निर्माण कार्य तथा फोहोरमैला प्रशोधन केन्द्र निर्माणको कार्य भइरहेको छ ।

रु. ३ करोड २३ लाखको बजेटमा शित भण्डारण गृह भवन निर्माण, रु. ८० लाख बजेटमा बाराही पुल परिसरमा एप्रोच रोड तथा रिटेनिङ्ग वाल निर्माण र रु. ५० लाख बजेटमा भनपा ८ पुरानो जागाति पुल निर्माण कार्य भइरहेको छ ।

नगरस्तरीय १२ वटा योजनाहरुको कुर्ल १२५६ मि ढुङ्गा छपाइ .र भनपा वडा नं. २ को देकोमिवा इतापाके जग्गा एकीकरण आयोजनामा ४ कि.मि पीच कार्य सम्पन्न भइसकेको छ । भ.न.पा.को तारा लाँ, लिबाली, कमलविनायक, देकोचा र चम्पकेश्वर गरी करिब २ कि.मि. बाटोमा पीच कार्य भइरहेको छ ।

वडास्तरीय योजनाहरुको लागि कुल रु. ६ करोड बजेट विनियोजन भएकोमध्ये हालसम्म रु. ३ करोड २० लाख खर्च भइसकेको छ ।

बजार अनुगमन :

उपभोक्ताहरुको हक अधिकारलाई सुनिश्चितता प्रदान गर्न खाद्य र उपभोग्य सामग्रीहरूको बिक्री वितरणलाई नियमन गर्न भक्तपुर नगरपालिकाले बजार अनुगमनलाई निरन्तरता दिंदै आएको छ । जनताको स्वास्थ्यस“ग प्रत्यक्ष सरोकार राख्ने औषधी पसलहरू, मासु पसल, मिठाइ पसल, किराना पसललगायतका विभिन्न व्यापार व्यवसायको नियमित रुपमा अनुगमन हुँदै आएको छ । अनुगमनको क्रममा भेटिएका म्याद नाघेका र सडे गलेका बस्तुहरू नष्ट गर्ने र मापदण्ड पूरा नगरी व्यवसाय संचालन गरेका व्यवसायीहरुलाई कानूनअनुसार कारवाही गरेका छौं । त्यसैगरी नगरको विकास निर्माणको कामको पनि नियमित अनुगमन भइरहेको छ ।

नक्सापास :

आर्थिक वर्ष ०८१।८२ को १० महिनामा कूल ४१९ वटा नक्सा दर्ता भएकोमा सो अवधिमा ३८३ वटा नक्सापास भयो । तीमध्ये ११३ जनाले निर्माण सम्पन्न प्रमाणपत्रसमेत प्राप्त गरिसकेका छन् ।

मुद्दा फछ्र्यौट :

आर्थिक वर्ष ०८१।८२ को १० महिनामा अनियमित निर्माणलगायतका विषयमा ४३२ वटा मुद्दा फछ्र्यौट भयो । सो अवधिमा नगरपालिकामा कूल ३७७ वटा मुद्दा दर्ता भएको थियो ।

पुस्तकालय :

भक्तपुर नगरपालिकाद्वरा सञ्चालित जनज्योति पुस्तकालयमा जम्मा १५९७ जना सदस्य छन् । देशका विभिन्न तहका जनप्रतिनिधिहरु तथा विभिन्न क्षेत्रसँग सम्बन्धित लेखकहरु र अनुसन्धानकर्ताहरु पुस्तकालयको सेवा लिन आउने गरेका छन् । साथै पुस्तकालयको बारेमा जानकारी लिनको लागि सामुदायिक तथा संस्थागत विद्यालयका शिक्षक, विद्यार्थीहरु पनि अवलोकन भ्रमण गर्न आइरहेका छन् । यस वर्ष पुस्तकालय प्रयोगकर्ता तथा पाठकहरुको संख्या १८,१७९ रहेका छन् । पुस्तकालयमा ई–लाइब्रेरी प्रयोगकर्ताको संख्या पनि क्रमशः वृद्धि हुँदैछ ।

सञ्चार माध्यम :

नगरपालिकाको सम्पूर्ण गतिविधि र निर्णयहरू मासिक 'भक्तपुर', पाक्षिक 'ख्वप पौ', 'भक्तपुर खबर डट कम' (अनलाइन) पत्रिका, फेसबुक पेज, वेभ साइटमार्फत सार्वजनिक गर्दै आएका छौं । यो वर्ष भक्तपुर महोत्सव स्मारिका, फोटो पुस्तक, सहकारी आवाज, खेलकुद स्मारिका र लक्ष्मीनरसिंह मन्दिर पुनःनिर्माण २०८२ गरी ५ वटा पुस्तकहरु प्रकाशित गरिसकेका छौं ।

खानेपानीः

नगरबासीहरुको घर–घरमा खानेपानी पु्याउन हामीले निरन्तर प्रयास गरिरहेका छौं । मेलम्चीको पानी वितरण भएपछि नगरबासीहरुले केही राहतको महसुस गरेका छन् । सम्पूर्ण नगरबासीहरुलाई पानीको सहज पहुँचका लागि पानीका विभिन्न श्रोतहरुको संरक्षणमा पनि हामीले जोड दिइरहेका छौं ।

विविध :

२०८१ असोज १ गते, भूमी व्यवस्था सहकारी तथा गरिवी निवारण मन्त्री माननीय बलराम अधिकारी र २०८१ असोज ६ गते प्रतिनिधिसभा अन्तर्गत शिक्षा, स्वास्थ्य तथा सूचना प्रविधि समितिका सभापति माननीय अम्मर बहादुर थापाको नेतृत्वमा आएको प्रतिनिधि मण्डलले भनपा १ स्थित १०८ रोपनी जग्गा र नगरपालिकाद्वारा सञ्चालित शैक्षिक संस्थाहरु र ख्वप अस्पतालको अवलोकन भ्रमण गर्नुभयो ।

२०८१ पुस १६ गते शिक्षा, विज्ञान तथा प्रविधिमन्त्री विद्या भट्टराईले भक्तपुर नगरपालिकाद्वारा सञ्चालित शैक्षिक संस्था र ख्वप अस्पतालको निरीक्षण गर्नुभयो ।

तीन वर्षको अवधिमा चितवन जिल्ला राप्ती नगरपालिकाका प्रमुख शम्सेर लामा, मेलम्ची नगरपालिकाको उपप्रमुख उमा प्रधान, गोर्खा जिल्लाको भिमसेनथापा गाउँपालिकाका अध्यक्ष लोकप्रसाद बन्जारालगायत ९० वटाभन्दा बढी स्थानीय तहका प्रमुख, उप प्रमुख र जनप्रतिनिधि तथा विभिन्न स्थानीय तहका प्रमुख प्रशासकीय अधिकृत र कर्मचारीहरुको प्रतिनिधिमण्डलले भक्तपुर नगरपालिकाको अध्ययन/अवलोकन भ्रमण गरेको रेकर्ड छ ।

साथै चिनियाँ जनप्रतिनिधिसभाका उपाध्यक्ष सियाओ चिए, चिनियाँ राष्ट्रिय जनजाति मामिला आयोगका माननीय मन्त्री फान युए, क्युवाका कार्यवाहक राजदुत अबेल अबाले डिस्पेन्च, जापानको गुनमा प्रान्तस्थित ओइजुमी नगरका नगर प्रमुख मुरायामा तोसिआकीलगायत विभिन्न देशका उच्च पदस्थ पदाधिकारीहरुले पनि भक्तपुरको ऐतिहासिक एवम् सांस्कृतिक सम्पदाहरुको अवलोकन भ्रमण गर्नु भएको छ ।

सबै वडाहरुमार्फत स्थानीय गरिब, असहाय तथा विपन्न नागरिकहरुलाई निःशुल्क विद्युतीय चुल्हो वितरण गरियो ।

२०८१ मंसिर १८ गते, ३३ औं अन्तर ार्ष्ट्रिय अपाङ्गता दिवसको अवसरमा अपाङ्गता भएका व्यक्तिहरुलाई आवश्यकता अनुसार अपांता सहायक सामग्री वितरण गरियो । समितिले ख्वप अस्पताललाई अपांगता भएकाहरुको लागि फिजियोथेरापी मेसिन, पूर्ण अपांगता भएकाहरुलाई थर्मस र सर्वोत्तम पिठो वितरण गरियो ।

२०८१ फागुन १ देखि भक्तपुर नगरपालिकाबाट राष्ट्रिय परिचय पत्र वितरण भइरहेको छ ।

भनपा क्षेत्रभित्रका आमाबुबा दुबै नभएका बालबालिकाहरुलाई मासिक रु. २ हजारका दरले रकम वितरण गर्दै आएका छौं ।

अन्त्यमा, आ.ब. २०८२।८३ का लागि नयाँ योजनाहरु तयारी गर्ने कार्य भइरहेको छ । विगतमा जस्तै यस वर्ष पनि यहाँहरुले नगर र नगरबासीहरुको हितमा अमूल्य सुझावहरु दिएर जनप्रतिनिधिहरुलाई सहयोग गर्नु हुन हार्दिक अनुरोध गर्दछौं ।

मिति : २०८२।२।६
सुनिल प्रजापति
प्रमुख, भक्तपुर नगरपालिका

# नेपाल ग्लोबल क्वालिफायरमा प्रवेश

काठमाडौं । नेपाल आइसिसी महिला टी-ट्वान्टी विश्वकप एसिया क्वालिफायरमा ऐतिहासिक सफलता प्राप्त गर्न सफल भएको छ । सुपर थ्री चरणको पहिलो खेलमा युएईलाई ५ विकेटले हराउँदै नेपाल पहिलो पटक ग्लोबल क्वालिफायरमा छनोट भएको हो ।

पहिलो चरणबाट तीन समुहको समूह विजेता सुपर थ्रीमा छनोट हुने प्रावधान अनुसार नेपाल, थाइल्याण्ड र युएई अघि बढेका थिए । सुपर थ्रीका शीर्ष दुई टिम ग्लोबल छनोटमा पुग्ने नियम अनुसार नेपाल र आयोजक थाइल्याण्ड छनोट हुन सफल भएका हुन् । थाइल्यान्डसँग पराजित भएको र नेपालसँग पनि हारेपछि युएईको सम्भावना समाप्त भएको थियो ।

नेपालले कुल ७ अंक बनायो । थाइल्याण्डले पनि एक खेल अगाडि ८ अंक जोडेको छ । युएईले भने सबै खेल सकिंदा ६ अंक मात्र बनायो । यसअघि नेपालले ग्रुप 'सी' बाट ५ अंक बनाउँदा थाइल्याण्ड र युएईले आ-आफ्नो समुहबाट ६/६ अंक जोडेर सुपर थ्रीमा स्थान बनाएका थिए । टेर्डथाई क्रिकेट मैदानमा नेपालले जितको लागि १ सय १५ रनको चुनौति १९.३ ओभरमा ५ विकेट गुमाउँदै पूरा गर्यो ।

ओपनर राजमति ऐरी ८ रनमा र सम्झना खड्का २१ रनमा आउट भए । कविता कुँवर यो खेलमा पनि क्रिजमा टिक्न सकिनन् । उनी मात्र ५ रनमा आउन भइन् । ३८ रन जोड्दा नेपालले ३ विकेट गुमाइसकेको थियो ।

यसपछि कप्तान इन्दु वर्मा र उपकप्तान पूजा महतो क्रिजमा थिए । यी दुईले पनि ठूलो साझेदारी गर्न सकेनन् । चौथो विकेटको लागि २४ रनको साझेदारी गर्दै पूजा १३ रनना पबिलियन फर्किइन् ।

पूजा आउट भएपछि पुर्व कप्तान रुविना क्षेत्रीले इन्दुलाई साथ दिइन् । यी दुईले पाँचौं विकेटको लागि ३७ रनको साझेदारी गरे । रुविना १८ बलमा ३ चौका सहित २३ रन जोडेर आउट भइन् । इन्दुले सर्वाधिक अविजित ३० रन बनाएर नेपालको जित सुनिश्चित गरिन् । उनले २८ बल खेल्दै २ चौका प्रहार गरिन् । बलिङमा मिचेली बोथा, सुरक्षा कोथे, वैश्नवी महेश र इशा ओजाले १/१ विकेट लिए ।

त्यसअघि टस जितेर नेपालले फिल्डिङ गर्ने निर्णय गरेको थियो । युएईले २० ओभरमा ७ विकेट गुमाउँदै १ सय १४ रनको योगफल खडा गर्यो । ओपनरद्वय इशा ओजा र तिर्था सतिशले पहिलो विकेटको लागि ४५ रनको साझेदारी गरे । तिर्था २१ रनमा राजमति ऐरीको बलमा आउट भइन् । पहिलो विकेट झार्न नेपालले १० औं ओभर कुर्नुपरेको थियो । इशाले २ चौका र १ छक्का सहित ३९ रन बनाइन् । यस्तै हिना होटचान्डीले २० र लाभान्या केनीले १२ रन बनाए ।

बलिङमा मनिषा उपाध्यायले ४ ओभर बलिङ गर्दै २० रन खर्चेर ४ विकेट झारिन्। कविता कुँवरले २ र राजमतिले१ विकेट लिइन्।

ग्लोबल क्वालिफायरमा कुल १० राष्ट्रबीच विश्व कप प्रवेशको लागि प्रतिस्पर्धा हुनेछ । एसियाबाट नेपाल र थाइल्याण्डसँगै अमेरिकाजबाट युएसए र सन् २०२४ को विश्वकपबाट स्कटल्याण्ड र बङ्गलादेशले ग्लोबल क्वालिफायर खेल्ने निश्चित भएको छ । अब युरोपबाट २, अफ्रिकाबाट २ र इस्ट एसिया प्यासिफिकबाट १ गरी ५ राष्ट्र छनोट हुनेछन् ।

ग्लोबल छनोटबाट ४ राष्ट्र २०२६ को जुनमा इङ्गल्याण्डमा हुने विश्वकपको लागि छनोट हुनेछन् । ग्लोबल छनोटमा सहभागी टिमहरुलाई २ समूहमा विभाजन गरेर हरेक समूहबाट शीर्ष २ टोली अघि बढ्नेछन् । ग्लोबल छनोटको मिति र स्थान तय भइसकेको छैन ।

# मुलरको अन्तिम खेलमा बायर्नको सहज जित

एजेन्सी । जर्मन बुन्डेसलिगा च्याम्पियन बनेको बायर्न म्युनिखले होफेनहाइमलाई ४-० ले हराउँदै सिजनको अन्त्य गरेको छ । थोमस मुलरले बायर्नबाट अन्तिम खेल खेले । बायर्नमा १३ वटा बुन्डेसलिगा उपाधि र दुईवटा च्याम्पियन्स लिग जितिसकेका ३५ वर्षीय मुलर यही सिजनको समाप्तिमा सम्झौता सकिएपछि क्लबबाट विदा हुनेछन् । उनले आफ्नो खेल जीवनको महत्वपूर्ण समय बायर्नमा बिताए । मुलरले ५ सय ३ बुन्डेसलिगा खेल खेले । लिगको सर्वाधिक खेल खेल्ने सूचीमा उनी १२औं स्थानमा छन् । उनले बायर्नबाट २ सय ४८ गोल गरेका छन् ।

दोस्रो हाफमा उनको ठाउँमा हेरी केन मैदान प्रवेश गरेका थिए । माइकल ओलिसेले खेलको ३३औं मिनेटमा फ्रिकिकमार्फत गोल गर्दै बायर्नको खाता खोले ।

त्यसपछि छिट्टै जोशुआ किमिखले ५३ औं मिनेटमा नजिकबाट प्रहार गरेर बायर्नको अग्रता दोब्बर बनाए । सर्ज ग्नाब्रीले पेनाल्टी क्षेत्रको किनाराबाट लो-सटमार्फत ८० औं तेस्रो गोल थपे । ८६ औं मिनेटमा केनले यो सिजनको आफ्नो २६औं लिग गोल गरे ।

च्याम्पियन बायर्नले यो सिजन नजिकको प्रतिस्पर्धी बायर लेभरकुसेनलाई १३ अंकले पछि पार्दै सिजन टुंग्यायो । होफेनहाइमले वेर्डर ब्रेमेनसँग हाइडेनहाइमको हारका कारण प्ले-अफ स्थानमा पर्नबाट जोगियो ।

# च्याम्पियन लिभरपुल पराजित

एजेन्सी । प्रिमियर उपाधि पक्का गरिसकेको च्याम्पियन लिभरपुल इंग्लिस प्रिमियर लिगमा सोमवार पराजित भएको छ । लिभरपुलले दुई पटक अग्रता लिए पनि ब्राइटनले सानदार पुनरागमन गर्दै ३-२ ले खेल जित्यो ।

परिवर्तित ज्याक हिन्सेलवुडले ८५ औं मिनेटमा गरेको गोल खेलको निर्णायक बन्यो । उनले मैदान छिरेको केही क्षणमै म्याट ओराइलीको क्रसमा हेडरमार्फत गोल गरेका हुन् । सुरुमा अफसाइडको निर्णय भए पनि भारद्वारा जाँचपछि गोल मान्यता दिइएको थियो ।

लिभरपुलले १-० र पछि २-१ को अग्रता लिएको थियो । तर जोगाउन सकेन । ब्राइटनले उत्कृष्ट पुनरागमन गर्दै तालिकामा आठौं स्थानमा उक्लियो, ब्रेन्टफोर्डभन्दा ३ अंकले अघि रह्यो ।

एमेक्स स्टेडियममा भएको खेलमा लिभरपुलले नवौं मिनेटमा हार्भी एलियटको गोलबाट अग्रता लियो । त्यसपछि यासिन अयारीले ग्राउन्ड ३२ औं मिनेटमा बराबरी गोल गरे । तर डोमिनिक स्जोबोस्लाईले इन्ज्युरी समयको पहिलो मिनेटमा गोल गरेपछि लिभरपुललाई पुनः अग्रता बनायो ।

६९ औं मिनेटमा कौरो मितोमाले गोल गर्दै खेललाई २-२ को बराबरीमा बनाए । त्यसपछि हिन्सेलवुडको गोलले ब्राइटन विजयी भयो । ब्राइटनले अब आइतवार लिगको आफ्नो अन्तिम खेल टोटेनहमसँग खेल्नेछ ।

## गठबन्धन....

देउवा आत्तिएका छैनन् । पछिल्लो समय सरकारले नागरिकलाई आशावादी बनाउन नसकेको भनेर आलोचना भएको विषयमा समेत देउवाले मुख खोलेका छन् ।

'किसुजनी नेतृत्वको सरकारले संविधान बनाएपछि २०४८ सालमा गिरिजाबाबुको नेतृत्वमा सरकार बन्यो । त्यही सरकारले विकासको जग बसालेपछि हामी आजको विकासको युगमा आइपुगेका हौं,' देउवाले भनेका थिए, 'त्यसपछि नै बाटो, सिँचाई, खानेपानी, स्वास्थ्यका क्षेत्रमा विकास भएको हो । २०४८ अगाडिसँग तुलना गर्नुभयो भने धेरै विकास भएको छ । निराश मात्रै हुने स्थिति छैन । कतिपय भूगोलको कठिनाइले गर्दा भएका अप्ठ्यारालाई बुझिदिनुपर्छ ।'

एमाले उप-महासचिव प्रदीप ज्ञवालीले पनि एकल सरकारमा समेत समस्या भएकाले गठबन्धन सरकारका साना असमझदारीको ठूलो अर्थमा व्याख्या गर्न नहुने बताए । 'एउटै पार्टीको सिंगल सरकार हुँदा त समस्या हुन्छन्, हामी त प्रतिस्पर्धी पार्टी नै समीकरणमा छौं । तर, पनि सरकारमा कुनै तनाव र समस्या छैन,' ज्ञवालीले भने, 'गभर्नर नियुक्तिको विषयमा ढिलाइ हुँदा अरूलाई कुरा गर्ने ठाउँ मिलेको हो । तर, हामी नियुक्तिको प्रक्रियामा छौं । म्यानेज गरेरै अगाडि बढ्छौं । हाम्रो स्थिति कस्तो छ भने ५/६ महिना केही खेलोमेलो नहुँदा कतिपयलाई छटपटी हुन्छ । यो स्थायित्व हुन नदिनेको नियत हो ।'

सहकारी ठगीमा छानबिनमा तानिएकी माया राई, बालकृष्ण खाँणकी पत्नी मञ्जु खाँणसहितले शनिबार कांग्रेस संसदीय दलको बैठकमा रोनाधोना नै गरे । केहीले मोहन बस्नेतदेखि ऊर्जा राज्यमन्त्रीबाट हटाइएका कान्छाराम तामाङमाथि पनि अन्याय भएको भन्न भ्याए ।

'सांसदहरूले विभिन्न मुद्दाका कुरा उठाउनुभयो । तर, सभापतिले राजनीतिमा यस्तै हुन्छ, हामी पनि जेल बसेर आएका हौं । थुनामा बसेर आएका हौं, ठूलो रूपमा लिनुहुन्न भन्ने जवाफ दिनुभयो,' कांग्रेस बैठकपछि प्रमुख सचेतक श्याम घिमिरेले भने । गम्भीर भ्रष्टाचारका मुद्दा लागे पनि पार्टीले बोक्ने र सरकारको विरोध गर्ने पक्षमा नभएको सन्देश देउवाले दिएका हुन् ।

'प्रचण्डजीले हाम्रो सभापतिलाई फोन गर्नु र जनार्दन शर्माले भेट्नु संयोग मात्रै हो । पहिले पनि केपी ओलीजीले डडेल्धुरा पुगेर सभापतिलाई फोन गर्नुभएको थियो । यो संयोग मात्रै हो,' बैठकपछि डा. प्रकाशशरण महतले भनेका थिए, 'दुई ठूला पार्टीको गठबन्धन हुँदा दलभित्र हाम्रो कुरा सुनिएन, सम्बोधन गर्न ढिलाइ भयो र निर्णय प्रक्रिया छिटो गर्नुपर्छ भनेर आवाज उठाउनु अन्यथा होइन । सभापतिले नै कमजोरी भएको विषयमा प्रधानमन्त्रीको ध्यानाकर्षण गराउँछौं भन्नुभएको छ ।'

केही असन्तुष्टि आएकै भरमा सरकार परिवर्तन गर्दा पनि समस्या समाधान नहुने बुझाइ कांग्रेसको रहेको एक नेता बताउँछन् । 'कांग्रेसले यसअघि तीनपटक एकल बहुमतको सरकार चलाउँदा पनि पूरा समय चलेन । नेकपाले पनि एकल सरकार चलायो, तर पूरै समय गएन' देउवानिकटका एक नेता भन्छन्, 'मान्छेका अपेक्षा ज्यादा भएपछि जुन सरकार आए पनि यस्तै हो । झन् २ ठूला दलको सरकारको सट्टामा बहुमत जुटाउन गाह्रो हुने सरकार बनाउँदाको कठिनाइ र जोखिम पनि कम चुनौतीपूर्ण हुँदैन ।'

## पुन:निर्माण...

नारायणमान बिजुक्छेँ (रोहित)ले पुनर्निर्माण सम्पन्न लक्ष्मीनरसिंह मन्दिरको उद्घाटन गर्दै स्थानीय जनताले कम खर्चमा काम सक्ने तर, केन्द्रीय सरकारले बढी लागत लाउने कारण कमिसनको भागबन्डा नै भएको बताए ।

भक्तपुर नगरपालिका र यहाँका स्थानीय जनताबाट कामगर्ने तरिका सबैले सिक्नुपर्नेमा जोड दिदैं उनले सम्पदा पुन:निर्माणको काम ठेक्कामा दिन नहुनेतर्फ सबै सचेत हुन आवश्यक भएको बताए ।

भक्तपुरका जनताबीचको एकता तथा आपसी सहयोगको भावनाले भक्तपुरले अपेक्षित उपलब्धी हासिल गरिरहेको र यहीँ नै भक्तपुरको विशेषता बन्दै गइरहेको अध्यक्ष बिजुक्छेँले बताएका छन् ।

सो अवसरमा भक्तपुर नगरपालिकाका प्रमुख सुनिल प्रजापतिले २०७२ सालको भूकम्पपूर्वको भन्दा निकै फरक मल्लकालिन मौलिक स्वरूपमै मन्दिरको पुन:निर्माण गरिएको जानकारी गराए ।

विदेशी सहयोग रकम विना नै भक्तपुर नगरपालिकाले सयौं सम्पदा पुनर्निर्माण गर्न सफल भएको उदाहरण प्रस्तुत गर्दै प्रमुख प्रजापतिले लक्ष्मी नरसिंह मन्दिरको पुनर्निर्माणमा पनि बिदेशी सहयता नलिएको स्पष्ट पारे ।

कार्यक्रममा नगरपालिकाकी उपप्रमुख रजनी जोशी, भक्तपुर जिल्लाका प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्याल, पुरातत्व विभागका महानिर्देशक सौभाग्य प्रधानांग त्यसैगरी इतिहासविद् प्रा.डा. पुरूषोत्तमलोचन श्रेष्ठ, ख्वप इन्जिनियरिङ कलेजका प्राचार्य ई. सुजन माक, नगरपालिकाको प्रमुख प्रशासकीय अधिकृत वसन्त भट्टराई र वडाध्यक्ष रवीन्द्र ज्याख्व लगायतले भक्तपुर नगरपालिकाले ऐतिहासिक सम्पदाहरुको संरक्षणमा उल्लेखनीय प्रगति गरिरहेको र भावी पुस्ता यसबाट अझ बढी लाभान्वित हुने बिश्वास ब्यक्त गरे ।

सो अवसरमा मन्दिर पुन:निर्माणका डकर्मी नाइके जगतराम न्हिसुतु र सिकर्मी नाइके बलराम शिल्पकारलाई सम्मान समेत गरिएको थियो ।

लक्ष्मीनरसिंह मन्दिर पुन:निर्माणसँगै ङातापोला(पाँच तल्ले मन्दिर) रहेको त: मारी र ग:हिटी क्षेत्रको आकर्षण थप बढेको छ ।

भक्तपुरका तत्कालीन राजा जयस्थिती मल्लले नगरको सुरक्षाका लागि लक्ष्मी नरसिंहलाई स्थापित गरि मन्दिर बनाएको इतिहासमा उल्लेख छ । मन्दिरभित्र हिन्दुका देवता नारायणको चौथो अवतार मानिने नरसिंहको क्रोधीरुप नभई देवी लक्ष्मीलाई कम्मर समाएर रहेको शान्तस्वरुपको मूर्ति रहेको छ ।

## भक्तपुर....

संस्था आसपास सूर्तिजन्य पदार्थ र मदिरा बेचबिखन गर्ने पसलहरु सञ्चालन गर्न दिन नहुने धाराणा व्यक्त गरे ।

उहाँले उपभोक्ताको हकहितलाई ध्यानमा राखेर समय समयमा बजार अनुगमन गर्नुपर्ने बताउँदै पत्रु खानेकुराले जनताको स्वास्थ्यमा गम्भीर असर पुर्याइरहेको हुँदा स्वस्थकर खानेकुरा सेवनतर्फ जनतालाई प्रोत्साहित गर्नुपर्ने बताउनुभयो ।

नगरपालिकालाई आत्मनिर्भर बनाउनेतर्फ लाग्नुपर्ने बताउँदै सांसद सुवालले विद्यालय शिक्षा राम्रो भए विश्वविद्यालय शिक्षा पनि स्वत: राम्रो हुने तर्क राख्दै कलेजका शिक्षकहरु विद्यालयहरुमा गई अनुगमन गरी आवश्यक सुझाव दिने प्रावधानले विद्यालय शिक्षाको स्तर अझ माथि उठ्ने बताए । उनले देशको सन्तुलित विकासतर्फ सरकारले जोड दिनुपर्ने धारणा व्यक्त गरे ।

कार्यक्रमका सभापति एवम् भक्तपुर नपाका प्रमुख सुनिल प्रजापतिले आर्थिक वर्ष २०८१।८२ मा नगरपालिकाले गरेका महत्वपूर्ण कामहरुको चर्चा गर्दै नगरपालिकाले संविधान र कानुनले दिएको अधिकारभित्र रहेर विभिन्न विकास निर्माण र अन्य कार्यहरुको अतिरिक्त हरेक वर्ष एउटा नगरस्तरीय महत्वपूर्ण योजना सम्पन्न गर्ने उद्देश्यअनुरुप काम गर्दै आएको जानकारी दिए ।

भक्तपुरका अग्रजहरुले गरेको त्याग, परिश्रम र दु:खको परिणामस्वरुप भक्तपुर आजको अवस्थामा आइपुग्न सम्भव भएको बताउँदै प्रमुख प्रजापतिले राजनीतिक दलका नेताहरु कल्पनाशील, देश र जनतामा समर्पित भए विकास छिटै सम्भव हुन्छ भन्ने एक उदाहरण भक्तपुर रहेको बताए ।

स्थानीय तह प्रजातन्त्रको जग भएको हुँदा स्थानीय तह अधिकार सम्पन्न भए मात्र प्रजातन्त्र बलियो हुन्छ भन्ने मान्यता रहेको बताउँदै देश र जनताको इमानदारीपूर्वक सेवा नै राजनीति हो भन्ने मान्यतालाई आत्मसात गर्दै जनप्रतिनिधिहरुको क्षमताले भ्याएसम्म भक्तपुरको शिक्षा, स्वास्थ्य, सरसफाइ, सम्पदा संरक्षण, विकास निर्माणलगायतलाई उच्च प्राथमिकतामा राखेर कार्य गर्दै आएको प्रमुख प्रजापतिले बताए ।

भक्तपुर नपाका उपप्रमुख रजनी जोशीले जनताको साथ र सहयोगविना भक्तपुरको विकास सम्भव नभएको बताउँदै जनतालाई निर्वाचनको समयमा दिएको वाचाअनुसार भक्तपुर नपाले घोषणापत्रलाई आधार बनाई काम गर्दै आएको धारणा राखिन् ।

सहप्राध्यापक विश्वमोहन जोशीले भक्तपुर नगरपालिकाका जनप्रतिनिधिहरुले धेरै उपलब्धीमूलक कार्यहरु गर्दै आएको बताउँदै जनताको साथ र सहयोगमा मात्र भक्तपुरको आजको विकास सम्भव भएको बताए । उनले नगरपालिकालाई केही रचनात्मक सुझावहरु दिँदै भक्तपुर कृषि प्रधान नगर भएको हुँदा उत्कृष्ट किसानहरुलाई प्रोत्साहन गर्ने कार्यक्रमहरुलाई जोड दिनुपर्ने, ख्वप अस्पतालमा सिटी स्क्यान, एमआरआईजस्ता सुविधाहरु थप्दै लानुपर्ने धारणा राखे ।

भक्तपुर नगरपालिकाद्वारा सञ्चालित ख्वप कलेज अफ इन्जिनियरिङका प्राचार्य ई. सुनिल दुवालले ख्वप कलेज अफ इन्जिनियरिङमा स्थापना कालदेखि हालसम्म २ हजार ७६९ विद्यार्थी भर्ना भई अध्ययन गरेकोमा हालसम्म १ हजार ५६४ विद्यार्थीहरुले अध्ययन पूरा गरिसकेको जानकारी दिए ।

ख्वप अस्पतालका निमित्त मेडिकल डाइरेक्टर डा. मजेशप्रताप मल्ले ख्वप अस्पतालले स्वास्थ्य क्षेत्रमा फड्को मारिसकेको बताउँदै कम शुल्कमा गुणस्तरीय सेवा नै ख्वप अस्पतालको प्रतिबद्धता रहेको बताए । ख्वप कलेज अफ लका प्राचार्य अनिता जधारीले ख्वप कलेज अफ ल सञ्चालन प्रारम्भ भएको ३ वर्ष अवधिमा वर्षको ६० जनाको दरले १८० जना विद्यार्थीहरु अध्ययनरत रहेको बताउँदै ल कलेजमा हाल ४२ जिल्लाका विद्यार्थीहरु अध्ययनरत रहेको जानकारी दिए । त्यस्तै ख्वप माविका प्रिन्सिपल लक्ष्मीप्रसाद कर्माचार्यले ख्वप मा.वि. को प्रगति प्रतिवेदन सुनाउँदै कलेज स्थापनादेखि हालसम्म २५ हजार ५३३ जना विद्यार्थीहरुले अध्ययन गरिसकेको र हरेक वर्ष रु. १ करोड ३० लाख भन्दा बढी रकम छात्रबृत्ति पनि वितरण गर्दै आइरहेको बताए ।

कार्यक्रममा प्रमुख अतिथि सुवालले भक्तपुर नगरभित्र नगरपालिकाको मापदण्ड अनुसार नियमित रुपमा भवन निर्माण गरी निर्माण सम्पन्न प्रमाणपत्र लिएका वडा नं ५ का कृष्णदेवी सिबन्जारलाई रु. ३ लाख, वडा नं. ४ का लक्ष्मीप्रसाद मधिकर्मी र उत्तमप्रसाद मधिकर्मीलाई रु. ३ लाख, वडा नं. ५ का मनिषा साखलाई रु. १ लाख ४ हजार ५९६, वडा नं. ९ का सुमित्रा नायभा श्रेष्ठलाई रु. २ लाख ४४ हजार २९० रुपैयाँ, वडा नं. ५ का राधेश्याम तुल्सीबाख्योलाई रु. १ लाख २१ हजार १७०, वडा नं. ९ का शिवप्रसाद श्रेष्ठलाई रु. १ लाख ५ हजार ८६, वडा नं. ३ का सुलोचना धुख्वालाई रु. ३ लाख गरी जम्मा रु. १४ लाख ७५ हजार १४४ रुपैयाँ रुपैंया बराबर काठ, ईटा र झिंगटी अनुदान स्वरुप प्रदान गरिएको थियो ।

कार्यक्रमका सभापति नगर प्रमुख सुनिल प्रजापतिले नगरपालिकामा कार्यरत उत्कृष्ट कर्मचारीलाई र ३० वर्ष सेवा गर्ने कर्मचारीहरुलाई कदर-पत्र र दीर्घ सेवाबाट सम्मान गरेको कार्यक्रममा भक्तपुर नगरपालिकाका प्रमुख प्रशासकीय अधिकृत वसन्त भट्टराईले धन्यवादज्ञापन गर्दै जनप्रतिनिधि, कर्मचारी र जनताको एकताले नै आजको भक्तपुर निर्माण भएको बताए ।

## असुरक्षा....

तर, विविध कारणबस भक्तपुर शाखाले मंगलबार मात्र सो ज्ञापन पत्र बुझाएको जिल्ला सचिव प्रदिप श्रेष्ठले बताए ।

ज्ञापन पत्रमा पेशागत सुरक्षासंगै भौतिक सुरक्षाको ग्यारेन्टी गर्न माग गरिएको छ । जनयुद्धकालमा राज्यपक्षबाट हत्या गरिएका पत्रकार कृष्णसेन इच्छुकदेखि हालै राजावादी आन्दोलनको क्रममा हत्या गरिएका पत्रकार सुरेश रजकसम्मका हत्यामा संलग्न दोषीहरूलाई अझै कानुनी दायरामा ल्याउन नसकिएकोप्रति प्रेस सेन्टरले गम्भीर आपत्ति जनाएको छ ।

प्रेस सेन्टरले मिलन नेपालीलगायत बेपत्ता पत्रकारको अवस्था सार्वजनिक गर्न समेत माग गरेको छ । सञ्चार क्षेत्रसँग सम्बन्धित विभिन्न कानून निर्माणमा भइरहेको ढिलाइ र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता संकुचन गर्न ल्याइने विधेयकहरूप्रति पनि ज्ञापन पत्रमा गम्भीर आपत्ति जनाइएको छ । कानून निर्माणको प्रक्रिया सरोकारवालासँग समन्वय गरेर अघि बढाउन प्रेस सेन्टरले आग्रह गरेको छ । प्रेस सेन्टरले साइबर क्राइमको डण्डा देखाएर प्रेस जगतलाई त्रसित नगर्न पनि माग गरेको छ ।

प्रेस सेन्टर नेपाल भक्तपुरले पत्रकारहरूको पेशागत अधिकार, भौतिक सुरक्षा, र अभिव्यक्ति स्वतन्त्रताको संरक्षणका लागि सरकारलाई गम्भीरतापूर्वक ध्यान दिन आग्रह गर्दै ज्ञापन पत्रमार्फत आफ्नो आवाज बुलन्द पारेको छ ।

ज्ञापन पत्र बुझ्दै भक्तपुर जिल्लाका प्रमुख जिल्ला अधिकारी गोपालप्रसाद अर्यालले जिल्लामा आफूले सम्बोधन गर्नुपर्ने कुरा ज्ञापन पत्रमा उल्लेख नभएको र केन्द्रसंग सम्बन्धित मागहरू भएकोले आफूले यसलाई गृह मन्त्रालय हुँदै सम्बन्धित ठाउँमा पुर्याइदिने प्रतिवद्धता प्रकट गरेका छन् ।

## उच्च....

जानुभन्दा पहिले नै बहालवाला अध्यक्ष सहित अहिले उमेदवार दिइरहेकाहरू समेतलाई राखेर जिल्ला प्रशासन कार्यालय काठमाडौंमा विधानसम्मत कार्यविधि अपनाएर अधिवेशन गराउन अनुरोध सहितको छलफल गर्दा पनि दबूबाट ठोस निर्णय नदिइ पन्छिएकोले अदालतसम्म पुग्नुपरेको संस्थापक शाक्यको धारणा रहेको छ । यति हुँदाहुँदै पनि अधिवेशनमा सहभागी प्रतिनिधिहरूमा जानकारी नगराउनु केन्द्रीय समितिको लापर्वाही देखिन्छ ।

देय् दबूको यस अधिवेशन यसभन्दा पहिले महेन्द्रनगरमा हुने भनिएकोमा आन्तरिक व्यवस्थामा असहज स्थित सिर्जना भएकोले पछि नवलपरासीको कावासोतीमा हुन गइरहेको थियो ।

पूर्व मेचिदेखि महाकालीसम्मका दबूका हरेक स्थानीय समितिका पदाधिकारी, प्रतिनिधि र पर्यवेक्षकहरूको सहभागिताले नवलपुर उत्साहप्रद भएको क्षण स्मरण गर्दै एक प्रतिनिधिको भनाई- 'जे भयो नराम्रो भयो । सुरुका दिनमा शोभायात्रा र उद्घाटन हुँदा उल्लेख्य सहभागी देख्दा परासीको ३९ डिग्रीको तापक्रम पनि शीतल लागेको थियो, जब बन्दसत्र सुरु हुनासाथ स्थानीय जिल्ला प्रशासन सहितको टोली नै आएर बन्द सत्र नगर्नु भन्ने आदेश सहितको पत्र देखाएर उर्दी जारी गरेपछि एकाएक माहौल तनावपूर्ण बन्यो र त्यहीँ नै बन्द गर्ने र चालू राख्ने बीचको विवादले उग्ररूप लिएपछि अधिवेशन खल्लो भयो ।'

नेवा: देय् दबू प्रतिनिधिहरूका लागि व्यवस्था गरिएको नवलपुरका होम स्टे

सहभागीजनको यस कुरा सुन्दा केन्द्रीय समितिका पदाधिकारीहरूले समन्वयात्मक भूमिका निभाउन नसक्नु दु:खद कुरा हो, अझ विशेष गरी केन्द्रीय अध्यक्ष पवित्र वज्राचार्यले बन्द सत्रमा सो कुराको खुलासा गरेर परिस्थिति सुल्झाउनु पर्नेमा बेखबर बनाइ बन्दसत्र कक्षबाट बाहिरिएका अध्यक्ष वज्राचार्य एकाएक काठमाडौं फर्किसकेको खबरले सातै प्रदेशबाट सहभागि जनाउने प्रतिनिधिहरू किंकर्तव्यविमूढ बन्न बाध्य भएका थिए । अध्यक्षले सबैसँग प्रत्यक्ष रहेर समस्या समाधानको मार्ग अपनाउनु पर्ने हो, समन्वयात्मक भूमिका निभाएर केन्द्रीयत्वको अभिभारा दर्शाउनु पर्ने तर स्वयं कक्षबाट टाढिनु देय् दबूको यो अधिवेशन दुर्भाग्य बन्न पुगेको छ । आर्थिक गतिविधिबारे पनि स्पष्ट धारणा राख्नुपर्ने हो त्यो गरिएको पाइएन र कोषाध्यक्षसमेत अस्वस्थको कारणले अनुपस्थित भएको जनाउनमा समिति भित्र नै केही चलखेल भएको हो कि भन्ने आशंका दबूभित्रकै सहभागीले गरेका छन् ।

यसपालिको अधिवेशन स्थगन हुनुको पीडा एकातिर छँदैछ अर्कोतर्फ व्यवस्थापनको कमजोरी बसोबासदेखि खानपान र सभाकक्षमा देखिएको अव्यस्थित वातावरणले प्रतिनिधिहरूको मन विचलित भएको धेरैले बताए । एक त गर्मी ठाउँ त्यसमाथि जंगलको बीचमा प्राकृतिक हावाको कमी र झन् प्रविधियुक्त एअरकुलरको पनि व्यवस्था नहुँदा ६/७ वटा पंखाले अत्यन्तै असहज महसुस भएको सहभागीले जनाए ।

अबको चरणमा नेवा: देय् दबूले एकतावद्ध गतिविधि अपनाएर केन्द्रीय समिति लगायत सबै तहका समितिमा आवद्ध नेवा:हरूले समझदारीपूर्ण व्यवहार अपनाएर विधान, नियम, कानुन समेटेर नेवा: समुदायको पहिचानको महत्वलाइ उजागर गर्न पछि पर्ने छैनन् भन्ने आशा राखौं ।

अन्त्यमा नेवा: देय् दबूभित्र दुइवटा कुराले धेरैको मनमा अशान्त पैदा भएको देखिन्छ । त्यो के भने उपत्यकाबासी नेवा: समुदाय र मोफसलका नेवा: बीचमा नेपाल भाषा जान्ने र नजान्नेको मतभेद भएको छ भन्ने । यस्तोखाले चर्चाको समाधानका लागि सबैको सकारात्मक सोच चाहिन्छ । भौगोलिक परिवेश र वातावरणको हिसाबले जहाँसुकै रहेपनि सबै नेवा: एकै हौं भन्ने धारणा राखौं ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# शेख हसिनाको भूमिका गर्ने चर्चित अभिनेत्री नुसरत फारिया पक्राउ

एजेन्सी । बंगलादेशकी अभिनेत्री नुसरत फारिया पक्राउ परेकी छिन्, उनलाई हजरत शाहजलाल विमानस्थलबाट सरकारविरोधी प्रदर्शनको घटनासँग जोडिएको भन्दै पक्राउ गरिएको हो । उनीविरुद्ध विद्यार्थीको आन्दोलनको क्रममा संदिग्ध हत्याको आरोपमा मुद्दा दर्ता भएको र थाइल्याण्ड जाने तयारीमा रहेको समयमा उनलाई पक्राउ गरिएको बंगलादेशी संचारमाध्यमले जनाएका छन् ।

सरकारविरोधी प्रदर्शनको क्रममा हत्या अपराधको घटनासँग जोडिएको भन्दै उनलाई पक्राउ गरिएको द ट्रिब्युनले जनाएको छ । सरकारविरुद्ध विद्यार्थीले चर्काएको आन्दोलनको क्रममा राजधानी ढाको भतरा क्षेत्रमा विद्यार्थीको संदिग्ध हत्याको घटनामा संलग्न भएको भन्दै नुसरतसहित १७ कलाकारविरुद्ध मुद्दा दर्ता गरिएको जनाइएको छ । भातरा पुलिस स्टेसनका सुजन हाक्युले नुसरतलाई पक्राउ गरिएको पुष्टी गरेका जनाएको छ । 'हामीले प्राप्त सूचनाको आधारमा विमानस्थलको अध्यागमन कार्यालयबाट उनलाई पक्राउ गरिएको हो' उनले भने । विद्यार्थीको आन्दोलनको क्रममा उनीविरुद्ध प्रहरीमा उजुरी दर्ता भएको थियो । बंगलादेशी संचारमाध्यमका अनुसार नुसरत थाइल्याण्ड जाने तयारीमा थिइन् ।

सन् २०१५ को फिल्म 'आशिकी'बाट उनले फिल्ममा डेब्यु गरेकी थिइन् । यो फिल्म बंगलादेशमा सुपरहिट भएको थियो । सन् २०२३ मा रिलिज भएको फिल्म 'मुजीब'मा उनले शेख हसिनाको भूमिका निर्वाह गरेकी थिइन् । हसिनाको भूमिका निर्वाह गरेपछि उनले आफूले भाग्यमानी ठानेको त्यतिबेला बताएकी थिइन् ।

नुसरत पक्राउको विरोधमा प्रतिक्रिया आउन थालेको छ । धेरैले यसलाई लज्जास्पद घटना भनेका छन् । मुद्दाको बयानका अनुसार फरिया र अन्य १६ जना कलाकार अपु विश्वास, निपुन अक्टर, आशना हबिब भावना र जायेद खानलाई पनि मुद्दा दायर गरिएको छ ।

# हलिउड फिल्म "टासी"को छायांकन टोली मुस्ताङमा

मुस्ताङ । पहिलो सरगमाथा आरोही तेन्जिङ नोर्गे शेर्पाको कथामा आधारित हलिउड फिल्म 'टाँसी'को छायाङ्कन मुस्ताङका विभिन्न स्थानमा हुने भएको छ । सन् १९५३ मा आरोही शेर्पाको नेतृत्वमा सर्वोच्च शिखर सगरमाथा आरोह गरिएका कथावस्तुलाई आधार बनाएर यहाँका तीन स्थानीय तहका विभिन्न स्थानमा फिल्म 'टासी'को छायाङ्कन गरिन लागिएको हो ।

हलिउडदेखि बलिउड र नेपाली प्राविधिक तथा अन्य जनशक्ति सम्मिलित फिल्म 'टासी'को ठूलो जम्बो टोली मुस्ताङ पुगेका छन् भने कतिपय आउने क्रममा रहेको बताइएको छ । अमेरिकी प्रविधि कम्पनी एप्पलले हलिउड फिल्म 'टासी' निर्माण गर्न लागेको हो ।

नेपालका विभिन्न जिल्लामा छायाङ्कन गर्ने योजना बनाइरहेको सो फिल्मको युनिट यतिबेलामा भने छायाङ्कनका लागि यहाँ आइपुगेको छायाङ्कन स्थल सहजकर्ता पाल्गेन गुरुङले जानकारी दिए । उनका अनुसार उक्त फिल्मका लागि करिब ३०० भन्दाबढी जनशक्तिसहित ८० बढी कार तथा भ्यान, साना ठूला सामान बोक्ने ट्रक ५० भन्दाबढी र शौचालय, बाथरुम, भान्सा तथा सुत्नेसमेतको व्यवस्था भएका १० भन्दा बढी सवारी साधन मुस्ताङ भित्रिएका छन् ।

उक्त टोली यहाँ आएपछि जोमसोम र पुथाङ विमानस्थलका करिब दुई दर्जन होटल एक महिनाका लागि अग्रिम बुकिङ भइसकेको गुरुङले जानकारी दिए । घरपझोङ गाउँपालिका-५ को कुछ्प तेरङ्गा गुम्बा र घरपझोङ-१ को लक्कीमा सो फिल्मको छायाङ्कन हुने सहजकर्ता गुरुङले उल्लेख गरे ।

यसैगरी थासाङ गाउँपालिकाको बोक्सी खोला र बारागुङ मुक्तिक्षेत्रको पुराङ, झारकोट, धार्काजुङ, फल्याक खेलमैदान तथा लुप्रा पासमा फिल्मको छायाङ्कन गर्ने योजना रहेको गुरुङको भनाइ छ ।

सगरमाथा आरोही शेर्पाको हिमाल आरोहरण, हिमाली सभ्यता, यहाँको जैविक विविधतालगायत परिदृष्य फिल्ममा समेटिने बताइएको छ । मुस्ताङमा यो फिल्म छायाङ्कनका लागि वेडनेस आउटडोर कम्पनीले सम्बन्धित यहाँका स्थानीय तहलाई 'लोकेशन' छायाङ्कनका लागि एक हप्ताअघि राजस्व शुल्कसमेत बुझाइसकेको छ ।

जिल्लाका तीन पालिकामा छायाङ्कन हुने फिल्मको युनिट आएसँगै जोमसोमका होटल भरिभराउ भएको पर्यटन व्यवसायी राकेश भट्टचनले जानकारी दिए । पर्यटन व्यवसायी भट्टचनले राष्ट्रिय गौरवको कोरला सडक सहज भएसँगै मुस्ताङमा हलिउड, बलिउड र कलिउड फिल्म छायाङ्कन गर्नेक्रम बढेको बताए । "मुस्ताङमा यस प्रकारका फिल्म छायाङ्कनले यहाँको आर्थिक विकासमा ठूलो योगदान पुग्ने र फिल्मका माध्यमबाट यहाँको पर्यटन विकास र प्रवर्द्धनमा ठूलो सहयोग पुऱ्याउँछ", उनले भने ।

मुस्ताङमा सडक सञ्जालको विकास नहुँदाका बखत बलिउड फिल्म 'खुदा गवाह' छायाङ्कन भएको थियो । त्यसपछि सबैभन्दा ठूलो लागतको हलिउड चलचित्र 'टासी' छायाङ्कन हुन लागेको हो । मुस्ताङका धार्मिक तथा पर्वतीय पर्यटन विकासमा यहाँ छायाङ्कन हुने चलचित्रले टेवा पुऱ्याउने गरेको छ । मुस्ताङमा पछिल्लो १० वर्षको अन्तरालमा दर्जनौं नेपाली, हिन्दी र अङ्ग्जी फिल्म छायाङ्कन भइसकेका छन् । यसैगरी सट मुभी, म्युजिक भिडियो र डकुमेन्ट्रीका लागि पनि मुस्ताङ प्रसिद्ध छायाङ्कन केन्द्र बन्दै जान थालेको छ ।

# तेस्रो संसार नेशनल स्टार म्युजिक भिडियो अवार्ड सम्पन्न

काठमाडौं । विश्वको सबैभन्दा लामो र धेरै विधामा पुरस्कार प्रदान गरी विश्व रेकर्ड राख्न प्रयासरत संसार नेशनल स्टार म्युजिक भिडियो अवार्ड ११४५ गत शनिबार नेपाल प्रज्ञा प्रतिष्ठानको हलमा सम्पन्न भएको छ । कलाकार स्वतन्त्र संसार महर्जन अध्यक्ष र डाइरेक्टर रहेको संसार क्रियशन नेपालको आयोजनामा उक्त अवार्ड समारोहमा बागमती प्रदेशका श्रम, यातायात तथा रोजगार मन्त्री प्रेम महर्जन मुख्य अतिथिका रुपमा सहभागी भएका थिए भने लेखक, निर्देशक र साहित्य अन्वेशक प्रकाश साय्मि, नेपाली चलचित्र क्षेत्रका अग्रज कलाकारहरू रविन्द्र खड्का, धिरेन शाक्य, र सिमान्त उदास, गायिका देविका बन्दना, गीतकारहरू भूषण खरेल, बुद्ध वीर लामा, साहित्यकार विक्रम भक्त जोशी, नृत्य निर्देशक भुवन दास श्रेष्ठलयायतका महानुभावहरू अतिथिका रूपमा सहभागी भएका थिए । उक्त नेपालभाषा स्टार म्यूजिक भिडियो अवार्डमा ३१ विधामा एकसय बहत्तर जनालाई अवार्ड प्रदान गरिएको थियो ।

यो अवार्ड विश्वकै सबैभन्दा लामो र बढी अवार्ड प्रदान गरिएको रूपमा विश्व रेकर्ड- गिनिज बुक अफ वर्ल्ड रेकर्डमा समावेश गर्ने तयारी भईरहेको छ। यस कार्यक्रममा नेपालभाषाका गीत संगीत क्षेत्रमा जीवनभर समर्पित भई क्रियाशील रहेका गायक र संगीतकार रत्न बेहोसी बज्राचार्यलाई नगद २५ हजार सहित लाइफटाइम एचिभमेन्ट अवार्ड प्रदान गरिएको थियो । त्यसै गरी खस नेपाली तथा नेपालभाषाका अग्रज कलाकार पवन जोशीलाई नगद १५ हजार सहित मल्टिमिडिया स्टार अवार्ड प्रदान गरिएको तथा नेपालभाषा म्यूजिक भिडियोका पहिलो निर्देशक विजय रत्न तुलाधरलाई सम्मान सहित अवार्ड प्रदान गरिएको थियो । ललितपुर महानगरपालिका वडा नं. १६ का वडा अध्यक्ष निर्मल रत्न शाक्यलाई सर्वोत्कृष्ट गीतकार अवार्ड र काठमाण्डौं महानगरपालिका वडा नं १८ का वडा अध्यक्ष न्हुच्छेकाजी महर्जनलाई गीतकार विधामा जुरी अवार्ड प्रदान गरिनुका साथै बागमती सफाई अभियानका अभियन्ता तथा गीतकार सुन्दर मान श्रेष्ठ (बागमती भाइ)लाई गीतकार विधामा पिपल्स च्वाइस अवार्ड प्रदान गरिएको थियो ।

विभिन्न ३१ विधामा प्रतिस्पर्धात्मक रूपमा अवार्ड प्रदान गरिएको उक्त समारोहमा अग्रज कलाकारहरू आशाकाजी थकू, कृष्णभक्त महर्जन, संगीता शाक्य, जुगल डंगोल, रामकृष्ण खड्गीलाई संसार तेज बहादुर स्मृति अवार्ड प्रदान गरिएको छ भने सरस्वती मानन्धर, बुद्ध साय्मि, रवि साय्मि, अनिल तुलाधर, सुरेन्द्र मानन्धर, निशा देसार र विश्वास बज्राचार्यलाई संसार सप्तरंगी सम्मान प्रदान गरिएको छ । त्यसै गरी कार्यक्रममा विशेष योगदान सम्मानका रूपमा सोहन मानन्धर, किशोर कुमार शाही, विजय मास्कि मगर, सबिना मानन्धर र रुक्साना महर्जनलाई सम्मानित गरिनुका साथै सामाजिक अभियन्ता राजाराम तण्डुकारलाई संसार फेसबुक प्रोफाइल अवार्ड प्रदान गरिएको छ । कार्यक्रम बिराजकाजी राजोपाध्याय र प्रमिला साय्मिले सञ्चालन गरेको कार्यक्रममा ललितपुर महानगरपालिका वडा नं २१ का वडा अध्यक्ष रविन्द्र महर्जनले स्वागत मन्तब्य राखेको थियो ।

# जुनियर एनटिआर दादासाहेब फाल्केको बायोपिकमा देखिने

एजेन्सी । तेलुगु सुपरस्टार जूनियर एनटीआर भारतीय सिनेमाका पिता मानिने दादासाहेब फाल्केको बायोपिकको भुमिकामा देखिने भएका छन् । 'मेड इन इण्डिया' नामक सो चलचित्रलाई वरुण गुप्ता (म्याक्स स्टुडियो) र एसएस कार्तिकेयद्वारा सेप्टेम्बर २०२३ मा प्यान इन्डिया शीर्षकको रूपमा घोषणा गरिएको थियो । तर, त्यसको बारेमा थप जानकारी दिइएको थिएन ।

फिल्मको घोषणा भए देखि नै सो फिल्मका लागि एसएस राजामौली, एसएस कार्तिकेय र वरुण गुप्ता मिलेर स्क्रिप्टमा लगनशीलताका साथ काम गरिरहेका थिए । तर, अहिले उनीहरूले चलचित्रको पटकथा फाइनल गरेका छन ।

सो स्क्रिप्ट फाइनल भए पछि जूनियर एनटीआरलाई सुनाइएको थियो, जसले तुरुन्तै सो परियोजनाका लागि आफ्नो स्वीकृति दिएको पिंकभिलाले रिपोर्ट गरेको छ ।

'एनटीआर जुनियरले स्क्रिप्ट सुने र फादर अफ इन्डियन सिनेमा भनेर चिनिने दादासाहेब फाल्केका बारेमा कम सुनिएका र बाहिर नआएका कथाहरू त्यसमा समावेश गरिएको थियो । जानकारहरूका अनुसार सो कथाले भारतीय सिनेमाको जन्म र उदयलाई वर्णन गरेको छ र विस्तृत विवरणले एनटीआर छक्क परेका छन । ठूलो पर्दामा भारतीय सिनेमाको पिताको भूमिका खेल्न पाउँदा उनी उत्साहित रहेको रिपोर्टमा भनिएको छ ।

आरआरआर स्टारर अहिले निर्देशक प्रशान्त नीलको पिरियड एक्शन ड्रामा 'ड्र्यागन' को छायांकनमा व्यस्त रहेका छन् र त्यसपछि निर्देशक नेल्सन दिलीप कुमारको अर्को फिल्मको छायांकनमा जानेछन् । दुवै फिल्मको काम पूरा गरे पछि जुनियर एनटीआरले 'मेड इन इन्डिया' को छायांकनमा सहभागी हुनेछन्, जुन उनले आफ्नो करियरमा अहिलेसम्म गरेको भन्दा फरक फिल्म हुने जनाइएको छ ।

यसैबिच, अभिनेता यशराज फिल्म्सको जासूसी एक्शन थ्रिलर वारः २ मा ऋतिक रोशनको सह-अभिनेताको रूपमा चाँडै पर्दामा देखिँदै छन् । चलचित्रको छायांकन सकिएको छ र यो वर्षको अगस्त १४ मा विभिन्न भाषामा ठूलो पर्दामा आउने तय भइसकेको छ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

THIMI TIMES WEEKLY

साप्ताहिक



वर्ष १८ अङ्क ३९ ने.सं. ११४५ तछलाथ्व पुन्ही जेठ २८ गते बुधबार, २०८२ 11 June 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## भिजिट भिसा विवादले संसद् ठप्प, दलहरू आरोप–प्रत्यारोपमै

काठमाडौं – गत जेठ ७ गते अख्तियार दुरुपयोग अनुसन्धान आयोगले गृह मन्त्रालयका सहसचिव तीर्थराज भट्टराईलाई त्रिभुवन विमानस्थलबाट नियन्त्रणमा लिएपछि सुरु भएको भिजिट भिसा प्रकरण अझै पनि राजनीतिक सहमतिको बिन्दुमा पुग्न सकेको छैन।

भट्टराईमाथि भिजिट भिसाको नाममा दुबईलगायत देश जान चाहने व्यक्तिबाट दैनिक लाखौं रुपैयाँ असुली गरेको आरोप लागेको छ। अनुसन्धानकै क्रममा भट्टराईले उठाएको रकम गृहमन्त्री रमेश लेखकको सचिवालयसम्म पुगेको सूचनाले उच्च तहसम्मको संलग्नताबारे शंका थप बलियो बनाएको छ।

यही घटनाले गृह मन्त्रालयमाथि नै प्रश्न उठाएको छ। भट्टराई पक्राउ परेपछि अध्यागमन प्रमुखमा विष्णु प्रसाद कोइराला नियुक्त गरिए पनि विवाद शान्त हुने संकेत देखिएको छैन।

गृह मन्त्रालयको जिम्मेवारीमा रहेको अध्यगमन कार्यालयमा करोडौं रकम उठाइएको आरोपसँगै गृहमन्त्री लेखकमाथि नैतिकता देखाएर राजीनामा दिनुपर्ने आवाज चर्किएको छ। माओवादी केन्द्र, एकीकृत समाजवादी र



राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा) प्रारम्भमा लेखकमाथि छानबिन र राजीनामाको मागमा एकजुट देखिए पनि पछिल्लो चरणमा माओवादी र समाजवादी केही लचक भएका छन्।

यसबीच कांग्रेस भने स्पष्ट रूपमा छानबिन समिति गठन र राजीनामाको माग अस्वीकार गर्दै आएको छ। उसले अख्तियारद्वारा भइरहेको अनुसन्धानको नतिजा कुरिनु पर्ने अडान राखेको छ।

यही कारणले गर्दा जेठ १५ गते बजेट प्रस्तुत भए पनि अहिलेसम्म संसदमा छलफल शुरू हुन सकेको छैन। रास्वपाले ५ बुँदे प्रस्तावमार्फत गृहमन्त्रीको राजीनामा र छानबिन समितिको माग दोहोऱ्याए पनि कांग्रेस त्यसमा सहमत देखिएको छैन।

विपक्षीको कडा अडान र सत्तापक्षको असहयोगका कारण सोमबारको बैठक पनि स्थगित गरियो। सभामुख देवराज घिमिरेले बैठक १ बजेसम्मका लागि सारिए पनि सहमतिको वातावरण नबनेपछि बुधबारसम्मका लागि स्थगित गरिएको हो। मंगलबार दिनभर संवाद गरेर समाधान खोज्ने सहमति भए पनि निकास अझै अन्योलमै छ।

के भन्छन् सांसद ?

प्रमुख प्रतिपक्षी नेकपा माओवादी केन्द्रका सांसद लेखनाथ दाहालले सत्तापक्ष आफ्नो हठ नछाडेका कारण सोमबार पनि सदन चल्न नसकेको बताए ।

दाहालले प्रतिपक्ष लचिलो भएर छलफलमा बसे पनि सत्तापक्ष आफ्नो हठबाट पछि नहटेका कारण सहमति जुट्न नसेको बताए ।

गृहमन्त्रीको राजीनामा र छानबिन समिति गठन गर्नुपर्ने आफूहरूको मागलाई सत्तापक्षले बेवास्ता गरेको उनले बताए । दाहालले प्रतिपक्षीले उठाएका मागबारे एमाले र खासगरि प्रधानमन्त्री केपी शर्मा ओली उदाशीन देखिएको आरोप लगाए ।

सहमतिका लागि सबै प्रतिपक्षी जिम्मेवार बनेर एकै ठाँउ रहेको उनले बताए । सांसद दाहालले मंगलबार दिनभर छलफल गरेर सहमतिको अधिकतम् प्रयास गर्ने जवाफ पनि दिए ।

उता रास्वपाका प्रमुख सचेतक सन्तोष परियारले भिजिट भिसा प्रकरणमा आफूहरूका मागबारेमा

बाँकी पेज ७ मा

## माओवादी केन्द्रको भक्तपुर जिल्ला समन्वय समिति पुनर्गठन

भक्तपुर । नेकपा माओवादी केन्द्रको भक्तपुर जिल्ला भेलाले जिल्ला समन्वय समिति पुनर्गठन गरेको छ । शनिबार सम्पन्न भएको दोश्रो जिल्ला भेलाले संयोजक सुनिल गोठे बासु र सचिव जीवन तजलाई पुन: दोहोर्याउदै जिल्ला समन्वय समिति पुनर्गठन गरेको हो । जिल्ला समन्वय समिति ७५ सदस्यीय बनेको छ । संयोजक र सचिवबाहेक सबै सदस्य रहने र नगरका पदाधिकारी पनि सो समितिका सदस्य हुने प्रावधान अनुरुप ७५ सदस्यीय समिति बनेको जिल्ला इन्चार्ज दिलकुमार प्रजापतिले जानकारी दिएका छन् ।

संघीयताको मुख्य पक्षधर पार्टी भएकोले माओवादी केन्द्रले जिल्लालाई कार्यकारी नबनाइ नगर समितिलाई कार्यकारी बनाएको र जिल्लामा समन्वय समिति मात्र रहेको उनले बताए । जिल्लाका चार वटै नगरमा नयाँ नेतृत्व आएसंगै जिल्ला समन्वय समिति पुनर्गठन गरिएको हो । माओवादी केन्द्रको भक्तपुर नगरमा राकेश सुवालको नेतृत्वमा नयाँ कार्यसमिति निर्वाचित भएको छ भने चाँगुनारायणमा नरेश खड्का नेतृत्वको समिति छ । त्यसैगरी

बाँकी पेज ७ मा

## कला र संस्कृति संरक्षण कार्यमा मध्यपुर थिमिका युवाहरु



भक्तपुर । मध्यपुर थिमिस्थित पाचो धिमे खल:ले तीन महिने धिमे बाजा प्रशिक्षण समापन तथा सम्मान कार्यक्रम सम्पन्न गरेको छ । कला, संस्कृति तथा परम्परागत बाजा जगेर्ना र संरक्षण गर्ने उद्देश्यले धिमे बाजा प्रशिक्षण दिइएको आयोजकले दाबी गरेको छ ।

कार्यक्रममा संघीय संसद् अन्तर्गत प्रतिनिधिसभाका सांसद माननीय दुर्लभ थापाले धर्म, संस्कृति र कलालाई संरक्षण गर्ने अभियानमा जुटेका युवाहरुलाई आभार व्यक्त गर्दै आवश्यक ठाउँमा सहयोग गर्ने प्रतिबद्धता जनाए । मौलिकता

बाँकी पेज ७ मा

## फोनिजद्वारा "पत्रकारितामा एआईको प्रयोग" विषयक दुईदिने प्रशिक्षण भक्तपुरमा सम्पन्न




भक्तपुर । नेपाल आदिवासी जनजाति पत्रकार महासंघ (फोनिज) बागमती प्रदेश समितिको आयोजनामा 'पत्रकारितामा एआईको प्रयोग' सम्बन्धी दुईदिने प्रशिक्षण कार्यक्रम मध्यपुर थिमिको बोदेस्थित नर्थ प्वाइन्ट मलमा सम्पन्न भएको छ । बागमती प्रदेश सरकार अन्तर्गतको आन्तरिक मामिला तथा कानून मन्त्रालयको सहयोग र फोनिज भक्तपुर शाखाको सहजीकरणमा सम्पन्न गरिएको हो ।

कार्यक्रमको उद्घाटन शुक्रवार मध्यपुर थिमि नगरपालिकाका प्रमुख सुरेन्द्र श्रेष्ठले गरेको थियो । उनले बदलिंदो प्रविधिको सन्दर्भमा पत्रकारहरूले आफूलाई अपडेट गर्दै जानु आवश्यक रहेको उल्लेख गर्दै स्थानीय सरकार सधैं सञ्चारकर्मीहरूसँग सहकार्य गर्न तयार रहेको स्पष्ट पारे ।

शनिबार समापन सत्रमा बागमती प्रदेश सभा सदस्य सुरेश श्रेष्ठले एआईको सही उपयोगले पत्रकारितामा गुणात्मक सुधार ल्याउन सकिने बताउँदै सहभागीहरूलाई यसप्रति सचेत र सजग रहन आग्रह गरे । साथै उनले बोदे क्षेत्रको सांस्कृतिक र ऐतिहासिक महत्व औंल्याउँदै

बाँकी पेज ७ मा

## सिथिनख : पर्वका "छ" महत्वपूर्ण कुराहरु !

साधारण त सिथिनख: पर्व मा तीन मुख्य कुराहरु लाई ध्यान दिएको पाईन्छ । पहिलो , कृषकहरु को जीवन संग सम्बन्धित "सिनाज्या" समयमा सम्पन्न गर्ने योजना को एक महत्वपूर्ण पर्व हो । दोस्रो , सिथिनख: पर्व मनाउन धारा , ईनार , पोखरी, र अन्य पानीको मुहानहरु र घर वरिपरि सरसफाइ गर्ने एक महत्वपूर्ण पर्व हो ।तेस्रो , जुन सबभन्दा महत्वपूर्ण छ त्यो हो कुमार को जन्मदिन मनाउने एक मुख्य पर्व हो ।यसै उपलक्ष्यमा कुमार षष्ठी को ६ वटा महत्वपूर्ण कुराहरु अगाडि सार्न खोजिरहेको छु ।सबभन्दा महत्वपूर्ण कुरा सिथिनख: पर्व कुमार कार्तिकेय को जन्मदिन को उपलक्ष्य मा वहाँको सम्झना मा मनाईआएको कुमार षष्ठी पर्व हो ।नेवा समुदायले कुमार




कार्तिकेय लाई सिथिद्यः भनेर बिशेष रुपमा मान्दछन् ।कुमार कार्तिकेय नेवा समुदाय को लागि प्रथम पूज्य मात्र नभइ एक तेजस्वी र प्रेरणादायक देवता पनि हुन् ।त्यसकारण यस पर्वमा कुमार कार्तिकेय को ६ वटा महत्वपूर्ण कुराहरु याद गरी मनाउने हुंदा यो पर्व षष्ठी तिथिको दिनमा मनाई आएको होकि भन्ने भान हुन्छ ।ती ६ वटा महत्वपूर्ण कुराहरु हुन् ।

१.. नेवा समुदाय ले कुमार कार्तिकेय ( सिथिद्य लाई प्रथम पुज्य देवता को रुपमा मान्दछन् ।त्यस्कारण सिथिद्य को रुपमा सधै आफ्नु घरको मूल ढोकाको सामुन्ने पिखालखु को रुपमा स्थापित गरेको पाईन्छ ।नेवा समुदाय ले कुनैपनि ठूलो काम गर्न घर बाहिर जानु पर्दा सबभन्दा पहिले पिखालखु मा पूजा गरेर कार्य सफल होस भनि कामना गरी ढोगेर जाने गर्दछन् ।शिव पार्वती ले कुमार कार्तिकेय लाई सुमेरु

बाँकी पेज ७ मा

# इतिहासमा पहिलोपटक मल्टिपल डिष्ट्रिक्टको नेतृत्वमा महिला निर्वाचित




काठमाडौँ । लायन्स इन्टरनेसनल मल्टिपल डिष्ट्रिक्ट ३२५ ले ५४ वर्षको नेपाली लायनिज्म इतिहासमा पहिलोपटक महिला नेतृत्व पाएको छ । डिष्ट्रिक्ट ३२५ जे को लायन वर्ष २०२४/२५ की गभर्नर तथा मल्टिपल काउन्सिल भाईस चियरपर्सन लायन मिलन थापा आगामी लायन वर्षको लागि मल्टिपल काउन्सिल चियरपर्सनमा निर्विरोध निर्वाचित भएकी छन् । यसको औपचारिक घोषणा भने ७ जुनमा प्रज्ञा प्रतिष्ठानमा हुने मल्टिपल कन्भेन्सनमा हुनेछ ।

मल्टिपल काउन्सिल चियरपर्सन पदमा मनोनयन दर्ता गर्ने समयसीमा भित्र लायन थापाको मात्र उम्मेदवारी परेपछि उनी निर्विरोध भएकी हुन् । लायन वर्ष २०२४/२५ मा उनले आफ्नो कुशल नेतृत्वशैली देखाउँदै डिष्ट्रिक्ट ३२५ जे लाई चर्चामा ल्याएकी छन् । उनको यो सफलतालाई केवल पद प्राप्तिको रुपमा मात्र नभएर परिवर्तन, समावेशी नेतृत्व र समर्पित सेवाको प्रतिनिधित्वको रुपमा हेरिएको छ । लायन थापाले लायन्स क्लब मार्फत् समाजसेवामा लामो समयदेखि सक्रिय रहँदै महिला सशक्तीकरण, शिक्षा र स्वास्थ्यका क्षेत्रमा विशेष योगदान दिएकी छन् । पहिलोपटक मल्टिपल काउन्सिलले महिला नेतृत्व पाएकोमा नेपालका सबै लायन्स लिडरहरुले खुशी हुँदै उनलाई शुभकामना दिएका छन् ।

मल्टिपल काउन्सिलको सेक्रेटरीमा डिष्ट्रिक्ट ३२५ सि का इलेक्ट गभर्नर लायन बबरजंग थापा र ट्रेजररमा डिष्ट्रिक्ट आर का इलेक्ट गभर्नर लायन नवराज सापकोटा निर्विरोध भएका छन् । भाईस काउन्सिल चियरपर्सनमा भने ३ जनाको उम्मेदवारी परेको छ । उक्त पदमा डिष्ट्रिक्ट एच का इलेक्ट गभर्नर लायन रविन्द्र बहादुर प्रधान, डिष्ट्रिक्ट जि इलेक्ट गभर्नर लायन विधान जोशी र डिष्ट्रिक्ट एफ का इलेक्ट गभर्नर लायन केशर बहादुर भण्डारीले मनोनयन दर्ता गरेका छन् ।

आफू निर्विरोध भएपछि उनले आफ्नो जीतले नेपाली लायनिज्मका नयाँ इतिहास कोरेको र मनदेखि समाजसेवामा सक्रिय सबै लायन्स लिडरहरु विशेषगरी महिलाहरुलाई थप प्रोत्साहन मिलेको बताइन् । उनले भनिन् – "यो जीत सम्मानसँगै मलाई लायनिज्मा प्राप्त ठूलो जिम्मेवारी पनि हो । अब यो नेतृत्वलाई रुपान्तरण र समावेशीताको उदाहरण बनाउनेछु ।" निर्विरोध निर्वाचित गर्न सहयोग गर्ने सबै अग्रज लायन्स लिडर र १५ वटै डिष्ट्रिक्टका गभर्नरहरुलाई उनले धन्यवाद दिँदै उनले आफ्नो पदीय जिम्मेवारी निर्वाहमा कुनै कमी हुन नदिने प्रतिबद्धता समेत व्यक्त गरिन् ।

# रहेनन् भक्तपुरका पुराना कम्युनिष्ट नेता तथा समाजसेवी कृष्णलाल गोजा



भक्तपुर । एक शताब्दी भन्दा अगाडि स्थापना भएको उपत्यकाकै जेठो अस्पताल भक्तपुर अस्पतालले १२३ वर्षपछि पहिलोपटक अत्याधुनिक सिटी स्क्यान मेसिन सञ्चालनमा ल्याएको छ । आइतबार अस्पताल परिसरमै भएको एक कार्यक्रममा बागमती प्रदेशका स्वास्थ्य मन्त्री किरण थापाले सेवाको सुभारम्भ गरे ।

वीर अस्पतालपछि स्थापना भएको दोस्रो पुरानो अस्पतालका रूपमा चिनिएको तत्कालीन प्रधानमन्त्री चन्द्रशमशेर राणाले चन्द्रलोक डिस्पेन्सरीको नाममा स्थापना गरेको अस्पतालमा बागमती प्रदेश सरकारले खरिद गरेर पठाएको अत्याधुनिक क्षमताको सिटी स्क्यान सञ्चालनमा आएको हो ।

मेसिन (उपकरण) बाट औपचारिक रूपमा आइतबारदेखि बिरामीलाई सेवा प्रवाह गरिएको अस्पताल प्रशासनले जनाएको छ । यसअघि मेसिन भक्तपुर अस्पतालमा ल्याएसँगै बागमती प्रदेश सरकारका स्वास्थ्यमन्त्री किरण थापा र बागमती प्रदेशसभाका सांसद सुरेश श्रेष्ठले मेसिन जडान क्षेत्रको अवलोकन गरी यथाशीघ्र सञ्चालनमा ल्याएर आमनागरिकलाई सहज र सुलभ सेवा प्रवाह गर्न अस्पतालका कार्यकारी निर्देशक डा सुरेन्द्रप्रसाद भट्टलाई निर्देशन दिएका थिए ।

अस्पतालका लागि बागमती प्रदेश सरकारअन्तर्गत स्वास्थ्य मन्त्रालयले बोलपत्र आह्वान गरी रु आठ करोड बजेटमा १२८ स्लाइसको सिटी स्क्यान मेसिन खरिद गरेर सञ्चालनमा ल्याइएको हो ।

कोरोना महामारीमा अस्पतालका तत्कालीन मेडिकल सुपरिटेन्डेन्ट एवं हाल बागमती प्रदेश स्वास्थ्य मन्त्रालयका सचिव डा सुमित्रा गौतमले यो अस्पताललाई रिफर सेन्टरबाट विशेषज्ञ सेवासहितको गुणस्तरीय सेवा दिलाउन सफल भएपछि देशकै उत्कृष्ट अस्पताल घोषणा भएको थियो ।

अस्पतालका कार्यकारी निर्देशक डा भट्टले सिटी स्क्यान जडान गरी परीक्षण सम्पन्न गरिएको बताउँदै आइतबार बिहान उद्घाटन गरेसँगै औपचारिक रूपमा सञ्चालनमा आएको बताए । उनले अब बिरामीले सिटी स्क्यान गर्न अन्य अस्पतालमा महँगो शुल्क तिरेर धाउनु नपर्ने बताए । कार्यक्रममा बागमती प्रदेशका पूर्व मुख्यमन्त्रीका राजनीतिक सल्लाहकार डि.बि. ढकालले भक्तपुर जिल्लामा स्वास्थ्य क्षेत्रको विकासका लागि दिन सक्ने तहमा पुगेका सबै जनप्रतिधिले जिल्लाको विकास निर्माणमा बिना पूर्वाग्रह खुल्ला रुपमा सहयोग गर्नु पर्ने धारणा व्यक्त गरेका थिए । कार्यक्रम अस्पताल व्यवस्थापन समितिका अध्यक्ष शशिजङ्ग थापाको सभापतित्वमा भएको थियो ।

# नेपालमा पहिलोपटक मस्तिष्क मृत व्यक्तिबाट मिर्गौला र कलेजो प्रत्यारोपण, बिरामी १९ दिनमै घर फर्किए



भक्तपुर । शहीद धर्मभक्त राष्ट्रिय प्रत्यारोपण केन्द्र, भक्तपुरमा ऐतिहासिक सफलता हात परेको छ। नेपालमै पहिलोपटक मस्तिष्क मृतक व्यक्तिबाट प्राप्त मिर्गौला र कलेजो एउटै बिरामीमा प्रत्यारोपण गरी सफल उपचार गरिएको छ। जटिल शल्यक्रियापछि बिरामीले १९ दिनमै स्वास्थ्य लाभ गरी आज डिस्चार्ज पाएका छन्।

यो महत्वपूर्ण चिकित्सकीय उपलब्धिको नेतृत्व वरिष्ठ प्रत्यारोपण शल्य चिकित्सक डा. पुकार चन्द्र श्रेष्ठले गर्नुभयो। शल्यक्रिया सफल बनाउन केन्द्रका विभिन्न विभाग प्रमुखहरू – डा. कल्पना कुमारी श्रेष्ठ (नेफ्रोलोजी), डा. दिपेश श्रेष्ठ (युरोलोजी), डा. आरती राई (एनेस्थेसिया तथा क्रिटिकल केयर), डा. सबिना श्रेष्ठ (प्याथोलोजी), डा. कृष्ण बुढाथोकी (रेडियोलोजी), डा. प्रवेश न्यौपाने (कार्डियोलोजी) तथा नर्सिङ निर्देशक पुजा कोइरालाको टोलीको पनि सक्रिय सहभागिता रहेको थियो।

त्यस्तै, विभिन्न अस्पतालबाट आएका विशेषज्ञहरू – डा. रोशन घिमिरे, डा. सुवास आचार्य, डा. दिनेश चटौत र कलेजो प्रत्यारोपण फिजिसियन डा. शेखर पौड्यालले पनि प्रत्यक्ष सहयोग पुऱ्याएका थिए।

बिरामीका परिवारजनले नेपालमै न्यूनतम खर्चमा यस्तो उच्चस्तरीय सेवा प्राप्त भएकोमा खुसी व्यक्त गर्दै भने, "हाम्रो लागि त यो सपना जस्तै हो।"

शल्यक्रिया सफल बनाउन स्वास्थ्य तथा जनसंख्या मन्त्रालयले सक्रिय भूमिका खेलेको थियो। स्वास्थ्य मन्त्री प्रदीप पौडेलको पहल र समन्वयमा सम्पूर्ण प्रक्रिया सहज ढंगले सम्पन्न भएको चिकित्सक टोलीले जनाएको छ। १८ वर्षीय मस्तिष्क मृत युवकका परिवार र काठमाडौँ मेडिकल कलेजलाई अंग दानका लागि विशेष धन्यवाद दिइएको छ।

डा. पुकार श्रेष्ठका अनुसार, "अब नेपालमै पनि विश्वस्तरीय प्रत्यारोपण सेवा सम्भव भएको छ। अंग फेल भएका बिरामीहरूलाई विदेश जानुपर्ने बाध्यता अब हटेको छ।"

# विद्यालयमै लोकतन्त्रको अभ्यास : एभरेस्टमा विद्यालयस्तरीय निर्वाचन

भक्तपुर । लोकतान्त्रिक मूल्य र मान्यतालाई पूर्ण रुपमा अङ्गीकार गरी स्वच्छ मर्यादित चुनावी अभ्यासको प्रंवर्द्धनलाई प्राथमिकतामा राख्दै एभरेस्ट इङ्लिस स्कुलमा विद्यालयस्तरीय निर्वाचन सभ्य रूपमा सम्पन्न गरिएको छ । भानु, लक्ष्मी, लेखनाथ र मोति चार सदनका क्याप्टेन तथा भाइस क्याप्टेन चयनका लागि गरिएको निर्वाचनले राष्ट्रिय निर्वाचनको झल्को दिएको थियो ।

लोकतान्त्रिक चेतना, नेतृत्व विकास, सामूहिक कार्यभावना र सहकार्यको संस्कृति विकास गर्ने उद्देश्यले आयोजना गरिएको निर्वाचनमा कक्षा ७ देखि १० सम्मका ४६८ विद्यार्थीहरूले मतदाताको रूपमा सहभागी जनाएका थिए । उम्मेदवारहरूको नाम दर्ता, चुनाव चिन्ह वितरण, र प्रचारप्रसारदेखि मतगणना आदि प्रक्रियाहरू विधिवत तथा औपचारिक ढङ्गले अघि बढाइएको थियो ।

चुनावी प्रचार प्रसारमा उम्मेदवार तथा सदनात्मक सदस्यहरुको उत्साहपूर्ण सहभागिता देखिएको थियो । मतदाता शिक्षाको रूपमा मतदान प्रक्रिया, मत बदर हुन सक्ने अवस्था, आचारसंहिता र स्वस्थ प्रतिस्पर्धाको महत्वबारे विद्यार्थीहरूलाई पूर्व-अभिमुखीकरणसमेत प्रदान गरिएको थियो ।

निर्वाचन व्यवस्थापनमा पनि विद्यार्थीहरूले नै प्रमुख निर्वाचन आयुक्त, मतदान अधिकृत, पर्यवेक्षक, सुरक्षाकर्मी लगायतका सम्पूर्ण जिम्मेवारी बहन गरेका थिए । मतदान हुने अघिल्लो दिन नै मतदाता परिचयपत्र वितरण गरिएको थियो ।

बिहान ११ बजेदेखि सुरु भएको मतदान शान्तिपूर्ण, मर्यादित र अनुशासित रूपमा सम्पन्न भएको र मतदान पश्चात् मतपेटिका सिलबन्दी गरी विद्यालयका प्रधानाध्यापक, प्रशासकीय प्रमुख, सहायक प्रधानाध्यापक, पर्यवेक्षक तथा उम्मेदवार प्रतिनिधिको रोहवरमा मतगणना गरिएको थियो । यस निर्वाचनमा आठ पदका लागि २१ जना उम्मेदवारले प्रतिस्पर्धा गरेका थिए ।

निर्वाचित विद्यार्थी प्रतिनिधिहरूलाई विद्यालयका संस्थापक प्रिन्सिपल भक्त राजभण्डारीले प्रमाणपत्रसहित बधाई तथा सम्मान व्यक्त गरेका थिए । उनीहरूले विद्यालयको मूल्य, मान्यता र अनुशासनको रक्षा गर्दै जिम्मेवारीपूर्वक भूमिका निर्वाह गर्ने सफथ लिए । विद्यालयमा गरिएको यो चुनावी अभ्यासले विद्यार्थीहरूमा नागरिक जिम्मेवारी र लोकतान्त्रिक संस्कार अभिवृद्धिमा महत्वपूर्ण भूमिका खेल्ने विश्वास विद्यालय प्रशासनले व्यक्त गरेको छ । निर्वाचन कार्यक्रमको सम्पूर्ण व्यवस्थापन तथा संयोजन कार्यमा माध्यमिक तह संयोजक निरण मानन्धर लगायत सामाजिक अध्ययन विभागका शिक्षकहरुको सक्रिय सहभागिता रहेको थियो ।

# वातावरण दिवसमा विनायकका विद्यार्थीहरूद्वारा वृक्षारोपण

मध्यपुर थिमि । विद्यार्थीहरूमा वातावरण सम्बन्धी सचेतना जगाउन तथा हाम्रो वातावरण हामी आफैले नै संरक्षण गर्नुपर्छ भन्ने व्यावहारिक ज्ञान दिन विनायक शिक्षा निकेतन इङ्लिस स्कुलले जेष्ठ २२ गते विश्व वातावरण दिवसको अवसर पारेर वृक्षारोपण कार्यक्रमको आयोजना गरी मनाएको छ ।

विद्यालयका विभिन्न तहमा अध्ययनरत विद्यार्थीहरु सहभागी भई मनाइएको उक्त कार्यक्रममा पूर्व प्राथमिक तहका विद्यार्थीहरुले पूर्व प्रा वि कक्षा पाटी बिहारमा फूल तथा विभिन्न थरिका बोटबिरुवा रोपी मनाएका थिए भने कक्षा १ देखि ३ सम्मका विद्यार्थीहरूले सिद्धिकाली मन्दिर र त्यसको आसपासका क्षेत्रमा फूल तथा वृक्षारोपण गरी कार्यक्रमलाई सफल बनाएका थिए ।

त्यस्तै विद्यालयका विभिन्न बाल क्लबहरूमध्ये विनायक इको क्लब र विनायक इन्ट्याक्ट क्लबले जिल्ला वन कार्यालय एवम् विभित्र नर्सरीहरुबाट प्राप्त विभिन्न प्रजातिका बोटबिरुवाहरू ल्याएर तथा विद्यार्थीहरु आफैले समेत ल्याएका बिरुवाहरू निलबाराही मन्दिर परिसर तथा आसपासका क्षेत्रमा वृक्षारोपण गरी वातावरण सम्बन्धी सचेतना जगाउन कार्यक्रम सफल पारेका जनाएको छ । त्यस्तै सोही अवसरमा विद्यालयमा आयोजना गरिएको नारालेखन तथा चित्रकला प्रतियोगितामा उत्कृष्ट हुन सफल विद्यार्थीहरूलाई विद्यालयका सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाले ट्रफी एवं पुरस्कार वितरण गरेको थियो ।

कार्यक्रममा विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले शैक्षिक रुपान्तरणका लागि व्यावहारिक र सीपमूलक एवं प्रयोगात्मक शिक्षाका लागि विद्यालय लागिपरेको बताउँदै स्वच्छ, सफा र हराभरा वातावरण खातिर विद्यार्थीहरुले थालेको वातावरण संरक्षण तथा बचाउ अभियानको सफलताको शुभकामना दिएको थियो ।

कार्यक्रम निलबाराही क्षेत्र संरक्षण सरोकार समितिको आह्वानमा विनायक इको क्लब तथा इन्ट्याक्ट क्लबको संयोजनमा भएको थियो ।

# अस्ट्रियामा ९ जनाको हत्या पछि आफैंलाई गोली हानेर आत्महत्या

एजेन्सी । मंगलबार अस्ट्रियाको ग्राज शहरमा भएको घटनाले सम्पूर्ण विश्वलाई हल्लायो । इतिहासकै सबैभन्दा खराब विद्यालय गोलीकाण्डमा, २१ वर्षीय पूर्व विद्यार्थीले नौ जनाको हत्या गरे र त्यसपछि आफैंले आफुलाई गोली हानेर आत्महत्या गरे । यस आक्रमणमा अन्य १२ जना घाइते भएका छन् । यो घटनालाई युद्धपछिको अस्ट्रियाको इतिहासमा सबैभन्दा रक्तपातपूर्ण विद्यालय गोलीकाण्ड मानिएको छ ।

अस्ट्रियाको स्कूल आक्रमण कसरी भयो ?

यो रक्तपातपूर्ण घटना ग्राजको एक माध्यमिक विद्यालयमा भएको थियो । आक्रमणकारी त्यही स्कूलका पूर्व विद्यार्थी थिए, जसले सोही स्कूलमा पढेका थिए तर स्नातक गर्न सकेनन् । अस्ट्रियाका गृहमन्त्री गेरहार्ड केर्नरका अनुसार ती युवकले स्कूलमा प्रवेश गरेर र दुई हतियार - एउटा लामो बन्दुक र एउटा ह्यान्डगनले गोली चलाएको बताए । प्रहरीका अनुसार दुवै हतियार कानुनी रूपमा आक्रमणकारीको नाममा दर्ता भएका थिए र उनीसँग हतियारको लाइसेन्स पनि थियो ।

आक्रमणपछि आक्रमणकारीले विद्यालयको बाथरूममा गएर आफैलाई गोली हानेका थिए । प्रहरीका अनुसार ती युवक पहिले कुनै पनि आपराधिक गतिविधिमा संलग्न थिएनन् र उनको प्रहरी रेकर्डमा कुनै आपराधिक इतिहास पनि छैन ।

आक्रमणकारी को थियो ?

अहिलेसम्म प्रहरीले यी युवकको पहिचान सार्वजनिक गरेको छैन । यद्यपि, यो स्पष्ट छ कि उनी ग्राज क्षेत्रका बासिन्दा थिए र आक्रमण भएको विद्यालयका पूर्व विद्यार्थी थिए । प्राप्त जानकारी अनुसार, स्कूलबाट बाहिर निस्किएपछि उनी गहिरो निराशामा र डिप्रेशनमा थिए । आक्रमणको मुख्य कारण बदला लिइएको मानिएको छ, तर अनुसन्धान अझै जारी रहेको बताइएको छ ।

कति क्षति पुऱ्यायो ?

गृहमन्त्रीका अनुसार यस आक्रमणमा ९ जनाको घटनास्थलमै मृत्यु भएको थियो, जसमा ६ महिला र ३ पुरुष थिए । यसबाहेक अन्य १२ जना गम्भीर घाइते भएका छन्, जसको विभिन्न अस्पतालमा उपचार भइरहेको छ । घटनापछि अस्ट्रियाभर शोकको लहर फैलिएको छ । सरकारले तीन दिनको राष्ट्रिय शोक घोषणा गरेको छ र बुधबार बिहान १० बजे देशभर एक मिनेट मौनधारण गरिनेछ ।

अस्ट्रियामा सुटिङको इतिहास

यद्यपि अस्ट्रिया युरोपका ती देशहरूमा गनिन्छ जहाँ बन्दुक हिंसाका घटनाहरू तुलनात्मक रूपमा कम छन्, तर पछिल्ला केही वर्षहरूमा यहाँ केही ठूला गोलीकाण्डका घटनाहरू पनि भएका छन् ।

सन् १९९७ मा जोहान गौचले माउटरनडोर्फमा छ जनाको हत्या गरेका थिए ।

२०१३ मा, तल्लो अस्ट्रियाको जंगलमा एक शिकारीले चार प्रहरी र एक प्यारामेडिकको हत्या गरे ।

२०२० मा, कोभिड लकडाउनको समयमा भियनामा भएको आक्रमणमा चार जनाको मृत्यु भएको थियो भने २३ जना घाइते भएका थिए ।

तर पछिल्लो घटना सबैभन्दा भयानक छ किनभने यो एउटा विद्यालयमा भएको र जहाँ बालबालिका र शिक्षकहरू सबैभन्दा असुरक्षित अवस्थामा थिए ।

बन्दुक कानूनको बहस तीव्र बन्दै

यो घटनाले अस्ट्रियामा बन्दुक कानूनको बारेमा फेरि एक पटक बहस सुरु भएको छ । आक्रमणकारीसँग कानुनी रूपमा हतियारहरू रहेको कुरा बाहिर आएको छ । यस्तो अवस्थामा, प्रश्न उठ्छ कि अवस्थित इजाजतपत्र प्रणालीले पर्याप्त सुरक्षा सुनिश्चित गर्छ वा यसमा सुधारको आवश्यकता छ ? गृहमन्त्री गेरहार्ड केर्नरले सरकारले यस विषयमा गहन रूपमा अनुसन्धान गरिरहेको र आवश्यक परेमा बन्दुकको इजाजतपत्र सुधार गर्न नयाँ नियमहरू लागू गरिने बताए ।

विद्यालय सुरक्षा सम्बन्धी प्रश्नहरू

यो घटनाले विद्यालयहरूको सुरक्षाको बारेमा पनि गम्भीर चिन्ता व्यक्त गरेको छ । एक पूर्व विद्यार्थी कसरी हतियारसहित यति सजिलै विद्यालयमा प्रवेश गरेर यति ठूलो घटना गराए भन्ने प्रश्न उठिरहेको छ । स्थानीय प्रशासनले विद्यालयहरूको सुरक्षा व्यवस्थाको तत्काल समीक्षा गरिने बताएको छ । यसका साथै, विद्यार्थी र कर्मचारीहरूलाई यो आघातबाट राहत गर्न मनोवैज्ञानिक सहयोगको लागि विशेष परामर्श टोलीहरू पनि खटाइँदैछ ।

अनुसन्धानकर्ताहरूले आक्रमणकारीको मनसाय र मानसिक अवस्थाको गहन अनुसन्धान गरिरहेका छन् । यसका साथै घटनाको पछाडिको कारणहरू पूर्ण रूपमा बुझ्न सकियोस् भनेर उनको परिवार, साथीभाइ र सामाजिक सञ्जालका गतिविधिहरूको पनि अनुसन्धान भइरहेको जनाएको छ ।

अस्ट्रियाका राष्ट्रपति र प्रधानमन्त्रीले घटनालाई 'राष्ट्रिय त्रासदी' को रूपमा वर्णन गरेका छन् र पीडित परिवारप्रति समवेदना व्यक्त गरेका छन् ।

# वैज्ञानिकहरूको चेतावनी: पृथ्वीको कक्षमा उपग्रहहरूको संख्या खतरनाक स्तरमा पुग्ने प्रक्षेपण

© Orion Span

एजेन्सी । के तपाईंले कहिल्यै रातको आकाशतिर हेरेर सोच्नुभएको छ कि तपाईंको माथि के उडिरहेको छ ? मे २०२५ सम्म, पृथ्वीको परिक्रमा गर्ने ११,७०० भन्दा बढी सक्रिय उपग्रहहरू हुनेछन् र यो संख्या द्रुत गतिमा बढिरहेको छ । लाइभ साइन्सका अनुसार, २०२४ मा मात्र २,८०० भन्दा बढी नयाँ उपग्रहहरू कक्षमा पठाइएका थिए । यसको अर्थ प्रत्येक ३४ घण्टामा लगभग एउटा रकेट प्रक्षेपण गरिएको थियो । यो उपग्रह प्रक्षेपण गर्ने कार्यहरु धेरैजसो निजी अन्तरिक्ष कम्पनीहरू, विशेष गरी स्पेसएक्सले गरिरहेका छन् । कम्पनीको स्टारलिङ्क परियोजनाले हालसम्म ७,४०० भन्दा बढी उपग्रहहरू प्रक्षेपण गरिसकेको छ, जुन आजका सबै सक्रिय उपग्रहहरूको लगभग ६०% प्रतिशत हो ।

किन यति धेरै उपग्रहहरू प्रक्षेपणको कारण ?

मुख्य कारण 'मेगा कॉन्स्टेलेशन्स'को उदय हो, जुन विश्वभर इन्टरनेट र सञ्चार सेवाहरू प्रदान गर्ने उद्देश्यसहितको विशाल उपग्रह नेटवक हुन् । स्पेसएक्सको स्टारलिङ्क बाहेक, अन्य प्रमुखहरुमा अमेजनको प्रोजेक्ट कुइपर, वनवेब र अन्य धेरै चिनियाँ कम्पनीहरू रहेका छन् ।

यी कम्पनीहरू विश्वव्यापी इन्टरनेट कभरेज सुधार गर्न चाहन्छन्, विशेष गरी दुर्गम र ग्रामीण क्षेत्रहरूमा । तर बृहत्तर कनेक्टिभिटीको यो कार्यमा गम्भीर जोखिमहरू पनि देखा पर्न थालेका छन् ।

अन्तरिक्षमा कतिवटासम्म उपग्रहहरू अटाउन सक्छ ?

विज्ञहरूका अनुसार तल्लो-पृथ्वीको कक्ष (ा्भइ), जुन जमिनबाट २,००० किलोमिटरसम्मको क्षेत्र हो, जसमा उपग्रहको 'भारवहन क्षमता' छ । यहाँ ठूलो कुनै समस्या बिना सुरक्षित रूपमा उपग्रहहरुलाई विचरण गराउन सकिन्छ जुन उपग्रहहरूको अधिकतम संख्या हो ।

वैज्ञानिकहरूका अनुसार यो संख्या लगभग १,००,००० सक्रिय उपग्रहहरू बराबर छ । हालको प्रक्षेपण दरलाई हेर्दा, हामी २०५० अघि यो सीमामा पुग्न सक्छौं । मृत र निष्क्रिय उपग्रहहरू सहित कुल मिलाएर अन्तरिक्षमा लगभग अहिले १४,९०० उपग्रहहरू रहेको अनुमान छन्, हार्वर्ड र स्मिथसोनियन खगोलशास्त्री जोनाथन म्याकडोवेल भन्छन् ।

# मल्लकालिन शास्त्रीय संगीत महोत्सव हुँदै

ललितपुर । ३८८ वर्ष अघि देखि निरन्तर रुपमा जेठ शुक्ल पुर्णिमाका दिन संचालन हुँदै आएको शास्त्रीय संगीत महोत्सव आज ललितपुरको मंगलबजारस्थित दरबार परिसरमा हुँदैछ । ३८८ वर्ष देखि अर्थात सिद्धिनरसिहं मल्लको पालादेखि आजको दिन, हरेक जेठ शुक्ल पुर्णिमाका दिन शास्त्रीय संगीत महोत्सव गर्ने प्रचलन छ ।

संगीत महोत्सवमा राजा सिद्धिनरसिहं मल्लले तयार गरेका राग मल्हारसहित ३१ वटा गीत गाउने गरिन्छ । ३८८ वर्ष अघि देखि निरन्तर रुपमा संगीत महोत्सव भइरहेकोले आजका दिनलाई राष्ट्रिय संगीत दिवसको रुपमा घोषणा गर्नका लागि स्थानीयले माग गरेको छ ।

आज संगीत दिवसको रुपमा मंगलबजारमा दुई वटा सांगितिक कार्यक्रम हुन लागेको आयोजक मध्येका एक कार्तिक नाच संरक्षण समितिले जनाएको छ । कार्यक्रमको आयोजना समितिसहित ललितपुरका विभिन्न जातिय समाज, विभिन्न संघसंस्थाले गरेको छ । परम्परागत रुपमा निरन्तर रुपमा चलिरहेको सिद्धिनरसिहं मल्लका गीतहरुको प्रस्तुतीको कार्यक्रम दिउँसो १२ बजेदेखि बेलुकी ५ बजेसम्म हुनेछ भने बेलुकी ५ बजेपछि पनि विभिन्न कलाकारहरुको सांगितिक कार्यक्रम हुनेछ ।

आज संगीत दिवसको रुपमा मंगलबजारमा मात्र नभएर बुंगमती, खोकना, किर्तिपुर, पोखरा, भक्तपुर, तानसेन, टोखा, दोलखा लगायतमा पनि सांगितिक कार्यक्रम हुन लागेको छ । त्यस्तै आज नै मंगलबजारमा मल्लकालीन सिहांसन र परम्परागत पौभाको पनि प्रदर्शन गरिदैछ । हरेक वर्ष जेठ शुक्ल पुर्णिमाका दिन मंगलबजारमा राजा सिद्धिनरसिहं मल्लका छोरा श्रीनिवास मल्लको सिहांसन सहित पौभा प्रदर्शन गरिने चलन अनुसार आज दिउँसो प्रदर्शन गर्न लागिएको हो ।

साथै काठमाण्डौं उपत्यकाका नेवारहरुले आजका दिन अर्थात जेठ शुक्ल पुर्णिमाका दिनलाई वर्षको सबैभन्दा लामो दिनको रुपमा लिने गर्दछन् । पश्चिमेली परम्परामा जून २१ तारिखलाई सबैभन्दा लामो दिनको रुपमा लिने गरिन्छ ।

यसैबिच आज काभ्रेको पनौतिमा भैरव, भद्रकाली र इन्द्रेश्वर महादेवको रथ जात्रा हुँदैछ ।

# सम्पदाको संरक्षण र प्रचारप्रचारका लागि सम्पदा पदयात्रा

काठमाडौं । दरबार स्क्वायर पर्यटन प्रवर्धन संघको आयोजनामा बागमती प्रदेश सरकार संस्कृति तथा पर्यटन मन्त्रालयको सहयोगमा सम्पदा पदयात्रा प्रतियोगिता २०८२ सम्पन भएको छ । उक्त कार्यक्रममा संस्थागत र सामुदायिक गरी ३३ वटा विध्यालयबाट छात्र र छात्रा गरि जम्मा ५०८ जनाको प्रतियोगी बिधार्थीहरुको सहभागिता थियो ।

बसन्तपुरमा भएको सम्पदा पदयात्रामा प्रमुख अतिथिको रुपमा माननीय शैलेन्द्र बज्राचार्य बागमती प्रदेश सांसद तथा पूर्व संस्कृति पर्यटन तथा सहकारी मन्त्री, बिशेष अतिथिमा गुठि संस्थानका प्रशासक शैलेश राज कुवर, नेवाः देय् दबूका अध्यक्ष पवित्र बज्राचार्य लगायतको उपस्थिति थियो । यसै गरि अतिथिमा श्री शार्दुल जंग गुल्म हनुमानढोका सेनानी अनिल श्रेष्ठ, सशस्त्र प्रहरी बल २४ नं गुल्मका गुल्मपत्ति अशोक न्यौपाने, प्रहरी वृत्त जनसेवाका प्रमुख कृष्ण कुमार चन्द्र, गुठी आन्दोलनका संयोजक एबम अभियन्ता गणपति लाल श्रेष्ठलगायतको उपस्थिति थियो ।

कार्यक्रममा स्वागत मन्तव्य तथा कार्यक्रम बारे प्रकाश रञ्जन लाल श्रेष्ठले गरेको थियो भने प्रमुख अतिथि माननीय शैलेन्द्र बज्राचार्यले पहिलो दुई टोलीलाई कार्ड कार्यक्रमको उद्घाटन तथा सम्पदा पदयात्रा प्रतियोगिता शुभारम्भ गरेको थियो ।

काठमाडौं दरबार स्क्वायर पर्यटन प्रवर्धन संघको आयोजनामा बागमती प्रदेश सरकार संस्कृति तथा पर्यटन मन्त्रालयको सहयोगमा नेपाल स्काउट सिद्धी गणेश ओपन स्काउट क्र्युको सकृयतामा सम्पदाहरुको पहिचान सहित सांस्कृतिक महत्व बुझाउने उदेश्यले पहिलो पटक सम्पदा पदयात्रा प्रतियोगिता हुन लागेको जानकारी काठमाडौं दरबार स्क्वायर टुरिजम प्रमोशन एसोसिएसनका सचिव रञ्जन लाल श्रेष्ठले दिए ।

सम्पदा पदयात्रा भीमसेनस्थान, प्याफल, कालभैरब, इन्द्रचोक, बांगेमुढा, क्षेत्रपाटी नेपा ब्याङक्वेट शोभाभगवती गेट हुदै विश्व शान्ति पोखरी शान्तिपुर सम्म पुगेर समापन भएको थियो ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### नेताको नाममा पार्टीको पोषण : राज्यको ढुकुटीको दुरुपयोग

राजनीतिक दलहरूमा देखिएको नैतिक पतनले उनीहरूको ऐतिहासिक गरिमा नै धमिलिँदै गएको छ । अझ दुःखद पक्ष के भने, दिवङ्गत नेताहरूको नाम बेचेर राज्यको स्रोत-साधन हत्याउने प्रवृत्ति बढ्दै गएको छ । यस्तो प्रवृत्तिले शासनप्रति नागरिकको विश्वास घटाउने खतरा बढेको छ ।

हालसालै सार्वजनिक भएको बजेटमा सत्तारूढ दल नेपाली कांग्रेसको भ्रातृसंस्था तरुण दलका लागि भवन निर्माणका नाममा ३ करोड रुपैयाँ विनियोजन गरिएको छ । बजेटमा 'गणेशमान सिंह स्मृति भवन निर्माण' भनेर उल्लेख गरिए पनि वास्तविकता भने तरुण दलको कार्यालय निर्माण नै हो ।

यस्तो अभ्यास नयाँ भने होइन। कम्युनिस्ट नेता तुलसीलाल अमात्यको नाममा स्थापना गरिएको प्रतिष्ठान अहिले एमालेको पार्टी कार्यालयको रूपमा प्रयोग हुँदै आएको छ । यस्तै, अन्य दिवङ्गत नेताहरूको नाममा खोलिएका संस्था पनि सम्बन्धित पार्टीका नेताहरूको प्रभावमा निजी सम्पत्तिको रूपमा प्रयोग भइरहेका छन् ।

यी सबै उदाहरणले देखाउँछ कि राज्यको ढुकुटीबाट पार्टी विशेषका संस्थाहरूलाई लाभ दिने कार्य अपारदर्शी, अनुचित र भ्रष्टाचारको खतरासहितको अभ्यास हो। एकजना पूर्वप्रधानमन्त्रीको नाममा खोलिएको 'सर्प पालन' प्रतिष्ठानमा त भ्रष्टाचार पुष्टि भई अख्तियारले विशेष अदालतमा मुद्दा नै दायर गरिसकेको छ ।

यी गतिविधिहरू इतिहासका सामन्ती प्रथाजस्तै छन् – जहाँ 'बिर्ता' र 'बक्सिस' मार्फत सत्तासीनहरूले आफ्ना कृपापात्रलाई पोस्ने गर्थे । आज त्यो काम करबाट संकलित पैसाबाट भइरहेको छ, जुन लोकतन्त्रको मर्म विपरित हो ।

यदि राज्यले दिवङ्गत नेताको योगदानको कदर गर्न चाहन्छ भने त्यसका लागि पारदर्शी, समान र कानुनी प्रक्रिया अपनाइनु आवश्यक छ । उनीहरूका नाममा गरिने कार्यक्रम वा संस्था सरकारकै अधीनमा रहेर, निष्पक्ष ढंगले सञ्चालन हुनु पर्छ ।

राजनीतिक दलहरूलाई आफ्ना नेताको स्मृतिमा कार्यक्रम गर्नै छ भने त्यसको खर्च जनताबाट विश्वास जितेर, स्वैच्छिक चन्दा वा सहयोगबाट ब्यहोर्नु उचित हुन्छ – राज्यको ढुकुटी दोहन गरेर होइन ।

यदि यस्ता संस्थाहरूलाई बजेट दिने हो भने कानुनी व्यवस्था बनाइ राजनीतिक दलका हैसियतअनुसार पारदर्शी ढंगले रकम विनियोजन गरिनु पर्छ र त्यसको लेखा परीक्षण पनि हुनै पर्छ । पहुँच र सत्ताको आधारमा दिइने सुविधा अन्त्य नगरेसम्म भ्रष्टाचार अन्त्यको आशा गर्नु केवल भ्रम हुनेछ ।

# पाठ्यक्रममै तोकेर गरौं उच्च शिक्षामा सुधार

● डा. हितेशकुमार भट्टराई

नेपालमा उच्च शिक्षामा विद्यार्थीको संख्या ह्वात्तै घटेको छ। सीमित स्रोत र साधनमा सञ्चालित कति कलेज (१२ पछिको शिक्षा) बन्द भइसके, कति बन्द हुने क्रममा छन्। काठमाडौँ विश्वविद्यालयमा पनि विद्यार्थीको संख्या घटेको छ। पहिले पहिले भर्ना हुन आएका उल्लेख्य विद्यार्थीसमेत फिर्ता पठाउने कतिपय विभागमा आजकल बल्लबल्ल सिट भरिन्छ। विद्यार्थी विदेश जानुका पछाडि हिजोआज राजावादीहरूले शासन प्रणालीमा दोष थोपर्न थालेका छन्।

तर सजिलै भन्न सकिन्छ दोष कहीँ भए, त्यो शिक्षा प्रणालीमा छ। शासन प्रणालीमा होइन। कोही-कोही चाहिँ कलेजको राम्रोसँग प्रचारप्रसार नभएर पनि विद्यार्थी नआएका भन्ने कुरा ठान्छन्। त्यही कुरा मनन गरेर हुनुपर्छ, काठमाडौँ विश्वविद्यालयले पनि आजकाल अनेक मिडियममार्फत प्रचारप्रसार थालेको छ। काम गर्दै-पैसा कमाउँदै विदेशमा पढ्न पाउने भएकाले पनि विद्यार्थी त्यता लागेका भनेर मान्नेहरू पनि छन्। कतिचाहिँ नेपालका कक्षाकोठा, प्रयोगशालालगायत भौतिक पूर्वाधार आदि कमजोर भएकाले विद्यार्थीको आकर्षण घटेको मान्छन्। कुरा के रहेछ भनेर सही ढंगले ठम्याउन शायद अनुसन्धान नै गर्नुपर्ला।

तर हामीले विद्यार्थी नेपालमै रोक्ने हो भने विदेशी विश्वविद्यालयसँग प्रतिस्पर्धा गर्न सक्नुपर्छ। भन्न सजिलो भए पनि योचाहिँ चुनौतीपूर्ण विषय हो। स्नातक तहमा विश्वका कुनै पनि ठाउँमा विद्यार्थीको ५० प्रतिशतभन्दा बढी समय अध्ययन अध्यापनमै जान्छ। प्रयोगशाला र अनुसन्धानमा समय कम नै जान्छ। यस लेखमा अध्ययन/अध्यापनलाई भएकै स्रोत र साधनबाट कसरी सुधार गर्न सकिन्छ भन्नेबारे चर्चा गरिनेछ। आगामी लेखमा प्रयोगशाला र अनुसन्धान कसरी सुधार्न सकिन्छ भन्नेबारे चर्चा गरौँला।

नेपालको शिक्षा व्यवस्था पचासौँ वर्षअघिदेखि नै कमजोर छ। विकसित देशको तुलनामा हामीसँग जनशक्ति, स्रोत र साधनको अभाव छ। हामीसँग गुणस्तरीय शिक्षा पाएका शिक्षकहरूकै कमी छ।

मेरो अनुभवमा शिक्षकहरूमा तीन प्रकारका बेथिति व्याप्त छन्। पहिलो, शिक्षकले गर्ने ठगी हो। शिक्षा क्षेत्रमा काम गरेका धेरै जसोलाई थाहा छ, हामीमाझ कति शिक्षकहरू नक्कली 'डिग्री' लिएर आएकाहरू छन्। यिनीहरूबाट गुणस्तरीय शिक्षाको आशा राख्नु मृगतृष्णासमान हुनेछ।

दोस्रो, कतिपय शिक्षक शैक्षिक प्रमाणपत्र पाएर पनि पढाउने सवालमा असक्षम छन्। आफूले अध्ययन गर्दाताक राम्रोसँग बुझेर नपढेकाहरू यस कोटीमा पर्छन्। त्यसो हुँदा, अहिले पढाउने जागिर पाए पनि आफै पाठ्यपुस्तक पढ्न सक्दैनन्। त्यसैले, १०-११ कक्षामाझैँ विषयवस्तु पढाउँछन्। धेरैजसो विद्यार्थीसमेत यस्तो पढाइबाट सन्तुष्ट हुँदै 'टिचरले सबै बुझ्नेगरी पढाउनु भयो' भन्छन्। किनकि अधिकांश विद्यार्थीलाई पाठ्यक्रमबारे जानकारी हुँदैन। ती केवल 'क्लास' लिन्छन्। परीक्षामा पढ्ने सामग्रीचाहिँ दुई तीन घण्टामै पढेर सकिने खालको हुन्छ।

शिक्षकले कक्षामा पढाएको कुरा सबै विद्यार्थीले बुझ्ने भन्ने हुँदैन। कति कुरा पछि दोहोर्याएर-तेहेर्यायर पढेपछि मात्र बुझ्ने हुनुपर्छ। त्यसो भए मात्र विद्यार्थीले अधिकतम सिक्ने प्रयत्न गर्छन् र सिक्ने सामग्री पनि धेरै हुन्छ। दोस्रो प्रकारका कोही कोही असक्षम शिक्षकबारे विद्यार्थीले दशौँ वर्षसम्म माथिल्लो प्रशासनमा गुनासो गरेका हुन्छन्। तर उनीहरू 'स्थायी जागिरे' भएका हुनाले तिनलाई हल्लाउने कसैको सामर्थ्य हुँदैन।

तेस्रो समस्या हो, शिक्षकको अल्छीपन। बिग्रिएको व्यवस्थामा सक्षम व्यक्तिलाई पनि काम गर्न मन लाग्दैन। जसरी ट्राफिक प्रहरी र बत्ती नभएको ठाउँमा जाम गराउने गरी मोटरसाइकलहरू तँछाडमछाड गर्छन्, त्यसै गरी अव्यवस्थित शिक्षा प्रणालीमा योग्य शिक्षक पनि अल्छीपनको प्रहसन देखाउन पछि पर्दैनन्। यिनीहरू तात्त्विक रूपमा असक्षम शिक्षकभन्दा फरक हुँदैनन्। यिनीहरूले दिने परिणाम आखिरमा असक्षमभन्दा खासै फरक हुन्न।

यस्तो शिक्षा प्रणालीमा बिस्तारै राम्रो शिक्षा हासिल गरेका होनहारहरू प्रवेश गर्छन् र बिस्तारै व्यवस्था परिवर्तन हुन्छ भनेर हामी आशासम्म गर्न सक्छौँ। अथवा, अहिलेकै समयमा, भएकै जनशक्तिबाट सानातिना नीति नियम फेरेर सुधारोन्मुख हुन सक्छौं।

सुधारका उपायको पहिलो नम्बर, पाठ्यक्रममा 'राम्रा पाठ्यपुस्तक'बाट पेज नम्बर नै तोकेर २०० देखि ४०० पेजको पाठ्यसामग्री निर्धारण हुनुपर्छ। पाठ्यक्रम मात्र तोकेर पर्याप्त छैन। सेल बायोलोजीको पाठ्यक्रमभित्र माइटोकोन्ड्रिया तोकिएला। माइटोकोन्ड्रियाबारे दश वर्ष पढे पनि पर्याप्त छैन। त्यसैले, पाठ्यसामग्री नै निर्धारण गर्नुपर्ने आवश्यकता आउँछ। धेरैजसो पाठ्यपुस्तकहरू ५-१० जना दिग्गज विद्वान् मिलेर लेखेका हुन्छन्। विकसित देशमा शिक्षकलाई पाठ्यसामग्री निर्धारण गर्ने छुट हुन्छ। कति अवस्थामा शिक्षकले विभिन्न पाठ्यपुस्तकबाट एउटा पाठ्यपुस्तक भन्दा राम्रा सामाग्री निकाल्न सक्छन्। तर त्यो अवस्था नेपालमा अहिलेसम्म आउने छाँट देखिँदैन।

पाठ्यक्रम नै तोकिएबाट विद्यार्थीलाई हुने फाइदाका कुरा गरौँ। दशकौँ काम गरेका अनुभवी पाठ्यपुस्तक लेखकबाट विद्यार्थीले सिक्न पाउँछन्। कक्षाकै शिक्षकले पनि सामग्री सहज बनाएर सहयोग गर्न सक्नेछन्। स्लाइडको यो जमानामा पाठ्यपुस्तक पढ्न विद्यार्थीहरू लागिपर्ने छन्। राम्रो भाषामा लेखिएको पुस्तक पढ्दा भाषाको पनि सुधार हुनेछ।

यसरी पाठ्यसामग्री निर्धारण गर्दा तीनै प्रकारका अकर्मण्य शिक्षकहरूलाई 'तह लगाउन' सकिने छ। पाठ्यसामग्री बुझेर विद्यार्थीलाई बुझाउँदा, पढाएको नमिलेको खण्डमा विद्यार्थीहरूले प्रमाणसहित गुनासो पोख्न सक्नेछन्। ठग शिक्षकहरू जागिरमा विभिन्न तरिकाले छिर्नबाट निरुत्साहित हुनेछन्। असक्षम शिक्षकहरूले बल गरेरै भए पनि सही, जटिल पाठ्यसामग्री पढाउन बाध्य हुने छन्। उनीहरूको पनि बौद्धिक विकास हुने छ। अल्छीहरू पनि ठेगान लाग्ने छन्।

यसरी प्रणालीको एक ठाउँमा परिवर्तन गर्दा अहिलेकै शिक्षा प्रणालीको समस्याको ५० प्रतिशतभन्दा बढी हिस्सा बोकेको अध्ययन-अध्यापन प्रक्रिया सुधार हुन सक्छ। यो प्रणाली लागू गर्दा कस्ता समस्या र विकृति आउन सक्छन्, पाइलट अध्ययन गर्न सकिन्छ। काठमाडौँ विश्वविद्यालयजस्तो आफ्नो पाठ्यक्रम आफै निर्धारण गर्ने संस्थामा पहिले यसको परीक्षण गर्न सकिन्छ। यो प्रणाली नेपालमा मात्र नभएर मानव संसाधन कमजोर भएका जुनकुनै देशमा लागु गर्न सकिनेछ।

शिक्षकहरूलाई अनुशासनमा राख्न बेलाबखत पढाएको शैक्षिक विषयको परीक्षण पनि गर्न सकिन्छ। त्यस्तो परीक्षणमा विषयको विज्ञ र शिक्षाको विज्ञ राख्न सकिन्छ। पाठ्यक्रमका विभिन्न आयाम, जान्नेदेखि नजान्ने विद्यार्थीको अनुभव समेटेर प्रतिक्रिया दिन सकिन्छ। पदोन्नति र ग्रेड त्यसैको आधारमा निर्धारण गर्न सकिन्छ। शिक्षकले पढाएको कक्षामा बसेर विज्ञहरूले जाँच गर्न सक्ने छन्। अर्को अलि सहज प्रक्रियाचाहिँ शिक्षकहरूले पढाएको कुरा माथिका पदाधिकारीलाई बुझाउन सक्छन्। यो पद्धति अहिले काठमाडौँ विश्वविद्यालयको स्कुल अफ साइन्समा लागु गर्न खोजिँदै छ। तर गलत नियतका शिक्षकलाई कारबाही गर्न अझ पनि धेरै नै गाह्रो हुनेछ।

विद्यार्थीले गुनासो गरे मात्र, अहिलेको स्थितिमा अकर्मण्य शिक्षकमाथि कारबाही हुने गर्छ। विद्यार्थीहरू धेरै तरीकाले शिक्षकको अकर्मण्यता ठम्याउन र गुनासो गर्न असक्षम हुन्छन्। अकर्मण्य शिक्षक चतुर हुने हुँदा 'सजिलो सजिलो' पढाउँछन्। जाँच पनि सजिलो बनाउँछन्। सबैलाई एकदम राम्रो अंक दिन्छन्। त्यसो भएपछि विद्यार्थी गुनासो गर्न जाने कुरै भएन। यसरी अध्ययन अध्यापनको स्तर कसरी बढ्न सक्छ? अतः नीति नियमकै स्तरमा कडिकडाउ नगरेसम्म समस्याको समाधान हुने देखिँदैन।

समस्याको चर्चा गरिराख्दा नेपालमै बसेर पढ्दा कति फाइदा हुन्छ भन्नेबारे पनि नभुलौँ। नेपालमा स्नातक पढेको खण्डमा परिवारबाट टाढा रहनु पर्दैन। ठूला चाडपर्व र पारिवारिक उत्सवमा छुट्नुपर्दैन। सायद साथीभाइ नै समेत धेरै बनाउन सकिएला। नेपालका समस्या र रीतिरिवाजको राम्रो ज्ञान होला। परिवारको निगरानी राम्रो भएकोले कुलतमा लाग्ने सम्भावना कम रहला। त्यस्तै, जीवनयापन खर्च पनि कम होला।

विद्यार्थी नेपालमा बस्दा देशलाई पनि धेरै फाइदा छ। पहिलो त, विदेशी मुद्राको संचय हुन्छ। हरेक वर्ष स्नातक बढ्ने विद्यार्थीले अर्बौं रुपैयाँ विदेश लैजाने गर्छन्। सो खर्च नेपालमै भए नेपाली अर्थतन्त्रलाई टेवा पुग्नेछ। हालसालै धराशायी भएको शिक्षा क्षेत्रले राहत पाउनेछ। शिक्षा क्षेत्रको विकास भए समग्रमा देशकै विकास सहज बन्छ। आखिर समृद्धि पनि मानवीय संसाधनको विकासबाट सहज बन्छ। कलकारखानाको विकासमा पनि सही शिक्षाकै आवश्यकता पर्छ। विदेश जाने नै भए पनि स्नातक तहपछि विदेश गए देशको आर्थिक-शैक्षिक आम्दानी बढी हुने थियो।

यी विभिन्न कारणले नेपालको अध्ययन अध्यापनको क्षमता वृद्धि गर्नु जरुरी छ। धेरै पैसा खर्च गरी खाडी राष्ट्रहरूले युरोप र अमेरिकाका 'ख्याक' प्राध्यापकहरू ल्याएर शिक्षामा सुधार गरिरहेका छन्। हामीसँग खर्च गर्न त्यत्रो पैसा छैन। त्यसैले, सजिलो उपाय लगाएर भएकै स्रोत र साधनमा अध्ययन अध्यापनको सुधार जरुरी छ। शायद विद्यार्थीहरू विदेशमा पढे, काम पाउन पछि सजिलो हुन्छ र पैसा धेरै कमाइन्छ भनेर विदेश पढ्न गएका होलान्। 'राम्रो काम पाउने पढाइ' दिलाउन सके सायद उनीहरू नेपालमै पढ्न लालायित हुने छन्।

(भट्टराई काठमाडौँ विश्वविद्यालय, बायोटेक्नोलोजी विभागका उप-प्राध्यापक हुन्।)
-उकालो डटकम

ThimiTIMES

वर्ष १८ अङ्क ३९ २०८२ जेठ २८ गते बुधबार

11 June 2025, Wednesday



# युएनड्रिप र आईएलओ १६९ कार्यान्वयनमा सर्वोच्च अदालतको महत्वपूर्ण निर्देशन

काठमाडौं । सर्वोच्च अदालतले आदिवासी जनजातिहरूको अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय दस्तावेजहरू "अन्तर्राष्ट्रिय श्रम संगठन (आइएलओ) को महासन्धि नं. १६९ र संयुक्त राष्ट्रसंघीय घोषणापत्र (युएनएमआरआइपी) को प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्न संघ, प्रदेश र स्थानीय सरकारलाई निर्देशात्मक आदेश जारी गरेको छ ।

मिति २०८० माघ २५ गते, न्यायाधीश सुष्मालता माथेमा र डा. कुमार चुडालको संयुक्त इजलासले दिएको फैसलाले कानून निर्माण र नीतिगत कार्यहरूमा आइएलओ-१६९ र युएनएमआरआइपी अनुसार स्पष्ट मार्गनिर्देशन दिएको हो । आदेशमा भनिएको छ, संघीय, प्रादेशिक र स्थानीय कार्यपालिका तथा व्यवस्थापिका निकायहरूले सम्बन्धित सन्धीहरूको मर्मअनुरूप नीति तथा कानुन निर्माण गर्नुपर्नेछ । संसदमा विचाराधीन विधेयकहरूलाई पनि तिनै मर्म र भावना अनुसार संशोधन वा परिमार्जन गर्न भनिएको छ ।

निर्देशनात्मक आदेश नेपाल सरकारको संघीय मामिला तथा स्थानीय विकास मन्त्रालय र व्यवस्थापिका संसद सचिवालयका नाममा जारी गरिएको छ । साथै, आदेशको प्रतिलिपि विपक्षीहरू, फैसला कार्यान्वयन निर्देशनालय र महान्यायाधिवक्ताको कार्यालयमा पठाउने तथा आदेशलाई विद्युतीय प्रणालीमार्फत अभिलेख शाखामा दर्ता गर्न पनि भनिएको छ ।

लाहुर्निप (नेपालका आदिवासीहरूको मानव अधिकार सम्बन्धी वकिल समूह) का अध्यक्ष अधिवक्ता दिनेश घलेका अनुसार, यस फैसलाले सरकारलाई बाँध्ने र बिउँझाउने कार्य गरेको छ । उनले सरकारले सन्धिहरूमा हस्ताक्षर गरेको भए पनि तिनको कार्यान्वयनमा लापरवाही गरेको भन्दै आलोचना गरे । अधिवक्ता घलेका अनुसार, "अब कुनै पनि नीति वा कानून बनाउँदा आदिवासी जनजातिको भाषिक, धार्मिक, सांस्कृतिक, आर्थिक तथा सामाजिक रीतिथितीको सम्मानसहित परामर्श अनिवार्य हुनेछ ।"

लाहुर्निपका उपाध्यक्ष शंकर लिम्बुले फैसलाको आधिकारिक प्रतिलिपि २०८२ जेठ २२ गते प्राप्त गरेको छ । यसअघि २०७४ र २०७५ मा अधिवक्ता दिनेश घले, शंकर लिम्बु, भिम राई, जितेन्द्र बज्राचार्य, र विमल श्रेष्ठले यससम्बन्धी रिट निवेदन दायर गरेको थियो ।

नेपाल सरकारले आइएलओ महासन्धि नं. १६९ लाई २०६४ भदौ ५ गते व्यवस्थापिका संसदमार्फत सर्वसम्मत अनुमोदन गरेको थियो । त्यसैगरी, ग्ल्न्ढ्क्षए लाई पनि सन् २००७ सेप्टेम्बर १३ मा संयुक्त राष्ट्रसंघको ६१ औं महासभामा नेपालले समर्थन जनाउँदै पक्षराष्ट्र बनेको थियो ।

सर्वोच्च अदालतको यो आदेशले आदिवासी जनजातिहरूका अधिकार सुनिश्चित गर्ने दिशामा कानुनी कार्यान्वयनलाई स्पष्ट मार्ग निर्देश दिएको छ, जसले आगामी दिनमा नीति निर्माण प्रक्रियामा ऐतिहासिक प्रभाव पार्ने अपेक्षा गरिएको छ ।

# मध्यपुर थिमिमा स्काउटको दोस्रो मध्यपुर मोडेल क्याम्प सम्पन्न

मध्यपुर थिमि । नेपाल स्काउट स्थानीय कार्यालयको आयोजना तथा मध्यपुर थिमि नगरपालिकाको सहयोगमा दोस्रो मध्यपुर मोडेल क्याम्प बालप्रेमी माविमा जेठ १५ देखि १७ सम्म सम्पन्न भएको छ ।

समापन समारोह मध्यपुर थिमि नगरपालिकाका नगरप्रमुख तथा मध्यपुर स्थानीय स्काउट कार्यालयका संरक्षक सुरेन्द्र श्रेष्ठको प्रमुख आथित्यमा सम्पन्न भएको थियो । उनले नगरपालिकाबाट स्काउटलाई सधैं सहयोग गर्न बचनबद्धता व्यक्त गरे । साथै उनले कार्यक्रममा प्रस्तुत गरिएको प्रतियोगितात्मक परम्परागत पोशाक प्रदर्शनी र प्रतिभा प्रस्तुतीकरणमा प्रथम, द्वितीय र तृतीय भएका स्काउटहरुलाई पुरस्कार तथा प्रमाणपत्र पनि वितरण गरे ।

जेठ १५ गते मध्यपुर थिमि नगरपालिकाका उपप्रमुख तथा मध्यपुर स्काउट कार्यालयका प्रमुख स्काउट विजयकृष्ण श्रेष्ठले झण्डात्तोलन गरि कार्यक्रमको उद्घाटन गरेको थियो । उद्घाटन कार्यक्रममा बोल्दै प्रमुख स्काउट श्री श्रेष्ठले स्काउट युवा तथा बालबालिकाहरुको लागि अत्यन्त महत्वपूण संस्था भएकाले यस संस्थालाई आवश्यक सहयोग गर्न तयार रहेको बताए ।

यस क्याम्पमा नगरपालिकाका विभिन्न १९ वटा विद्यालयका ३२१ जना स्काउटहरु सहभागी भएका थिए जसमा २१७ छात्रा स्काउट र १०४ छात्र स्काउटहरु थिए । उक्त क्याम्पमा साहसिक खेल, मनोरञ्जनात्मक खेल, सहभागीतामुलक खेल, ज्ञानवर्धकलगायत गरी २० वटा विभिन्न खेलहरु खेलाईएको क्याम्प प्रमुख सानु चक्रधरले जानकारी दिए ।

क्याम्प मध्यपुर थिमि नगरपालिकाको आर्थिक सहयोग तथा अन्य व्यवस्थापन युनिफाइड रोभररेञ्जर क्रू र आदर्श रोभररर्ञ्जर क्रूका रोभररेञ्जर तथा स्काउट लिडरहरुले सहयोग गरेका मध्यपुर स्काउट स्थानीय कार्यालयका स्थानीय आयुक्त तुल्सीहरि प्रजापतिले जानकारी दिए । यस क्याम्पको प्रमुख आकर्षणको रुपमा क्पथ अथअप्लिन, शप्ड ष्लिभ, च्यअप ऋषिदप्लन लगायत अन्य विभिन्न आकर्षक सहासिक खेलहरु रहेको थिए ।

# टुसा उम्रिएको आलु, प्याज खानु स्वास्थ्यका लागि फाइदा कि हानि ?

भूपाल बानियाँ
पोषणविद्

आलु र प्याजको टुसा उम्रिएमा विषाक्तता र गुणस्तरमा कमी आउँछ, विशेषगरी आलुमा सोलानिनको मात्रा बढ्ने खतरा हुन्छ।

आलुमा टुसा र हरियो भाग काटेर खान सकिन्छ, तर धेरै टुसा भएमा नखानु उचित हुन्छ, प्याजमा भने टुसा हटाएर प्रयोग गर्न सकिन्छ।

सामान्यतया, आलु र प्याजको टुसा उम्रिएको अवस्थामा खानु हुँदैन, विशेष गरी आलुमा विषाक्त पदार्थहरूको जोखिम हुन्छ।

टुसा उम्रिएका गेडागुडी अन्न स्वास्थ्यका लागि धेरै फाइदाजनक हुन्छ भन्ने कुरा धेरै सुनिन्छ । गेडागुडीलाई टुसा उमारेर खाँदा त्यसमा प्रोटिनको मात्रा धेरै बढ्ने पोषणविद्हरू बताउँछन् ।

गेडागुडी जस्तै आलु र प्याज जस्ता तरकारीहरूमा टुसा उम्रिएमा त्यो कत्तिको फाइदाजनक हुन्छ त ?

हाम्रो भान्सामा हतपति नटुट्ने तरकारी हुन्, आजु र प्याज । उम्रिएका आलु र प्याज भएमा हामीले हामी उम्रिएको भाग काटेर फ्याँक्छौं त्यसपछि बाँकी रहेका भाग पकाउँछौं।

टुसा उम्रिएको आलु र प्याज खाने कि नखाने भन्ने द्विविधा धेरैलाई हुन्छ ।

टुसा उम्रिएको आलु खान हुन्छ कि हुँदैन ?

टुसा उम्रिएको आलु र प्याज खानुहुँदैन भन्ने कुरा विशेषगरी आलुसँग सम्बन्धित छ, किनभने टुसा उम्रिएको आलुमा विषाक्त पदार्थहरू उत्पादन हुन्छन्, जुन स्वास्थ्यका लागि हानिकारक हुन सक्छ । प्याजको हकमा भने टुसा उम्रिनु सामान्यतया कम खतरनाक हुन्छ, तर यसको गुणस्तर र स्वादमा कमी आउँछ ।

खान नहुने कारण

आलुमा टुसा उम्रिँदा सोलानिन र चाकोनिन  जस्ता विषाक्त रासायनिक यौगिकहरूको मात्रा बढ्छ । यी यौगिकहरू आलुलाई कीटाणु र रोगहरूबाट बचाउन प्राकृतिक रूपमा उत्पादन हुन्छन्, तर मानव स्वास्थ्यका लागि हानिकारक हुन्छन् ।

विषाक्तता

सोलानिनको अत्याधिक मात्राले पेट दुख्ने, वाकवाकी लाग्ने, बान्ता हुने, पखाला लाग्ने, टाउको दुख्ने र गम्भीर अवस्थामा बेहोस हुने वा स्नायु प्रणालीमा असर पार्न सक्छ ।

आलुमा टुसा उम्रिँदा वा हरियो रङ देखा पर्दा सोलानिनको मात्रा बढी हुन्छ । हरियो भागमा यो रसायनको मात्रा विशेष रूपमा उच्च हुन्छ । बालबालिका, गर्भवती महिला, वृद्धवृद्धा र कमजोर प्रतिरक्षा प्रणाली भएका व्यक्तिहरूलाई यस्ता आलु खाँदा बढी जोखिम हुन्छ ।

सामान्यतया, सानो मात्रामा टुसा भएको आलुलाई टुसा र हरियो भाग हटाएर खान सकिन्छ किनभने सोलानिन मुख्य रूपमा टुसा र हरियो भागमा केन्द्रित हुन्छ । तर यदि आलु धेरै टुसा उम्रिएको छ वा पुरै हरियो भएको छ भने त्यसलाई खानु हुँदैन ।

विषाक्तताबाट कसरी जोगिने ?

यदि सानो मात्रामा टुसा उम्रिएको छ भने, टुसा र हरियो भाग राम्ररी काटेर फाल्ने । बाँकी भाग खान सकिन्छ, तर राम्ररी पकाउनुपर्छ । आलुलाई चिसो, सुख्खा र अँध्यारो ठाउँमा भण्डारण गर्नुपर्छ ता कि टुसा नउम्रियोस ।  सूर्यको प्रकाशले हरियो रङ र सोलानिन उत्पादनलाई बढाउँछ ।

पुरानो आलु नखाने किनभने धेरै पुराना वा चाउरिएको आलुमा पनि सोलानिनको जोखिम बढी हुन्छ ।

टुसा उम्रिएको प्याज खाँदा के हुन्छ ?

प्याजमा टुसा उम्रिनु सामान्य प्रक्रिया हो । यो आलु जस्तो विषाक्त हुँदैन । तथापि, टुसा उम्रिएको प्याज खानु कम उपयुक्त हुने कारणहरू यस्ता छन् ।

टुसा उम्रिँदा प्याजको पोषक तत्त्व र स्वाद टुसा बनाउन प्रयोग हुन्छ, जसले गर्दा प्याजको स्वाद कमजोर हुन्छ र बनावट नरम हुन्छ । यस्ता प्याज खानाले खानाको स्वाद बिग्रन सक्छ ।

टुसा उम्रिएको प्याजमा चाम्रोपन बढी हुन्छ, जसले गर्दा कुहिने वा ढुसी लाग्ने सम्भावना हुन्छ । यदि प्याज नरम, गनाउने वा ढुसी लागेको छ भने त्यसलाई खानु हुँदैन ।

टुसा उम्रिँदा प्याजको पौष्टिक तत्त्वहरू कम हुन्छ, किनभने प्याजले आफ्नो ऊर्जा टुसा बनाउन प्रयोग गर्छ ।

कसरी प्रयोग गर्ने ?

यदि प्याजमा सानो टुसा मात्र छ र बाँकी भाग ठिक छ भने, टुसा हटाएर खान सकिन्छ । टुसा आफैंमा पनि खानयोग्य हुन्छ र सलाद वा अन्य परिकारमा सीमित मात्रामा प्रयोग गर्न सकिन्छ । प्याजलाई सुख्खा, हावादार र चिसो ठाउँमा भण्डारण गर्नुपर्छ, जसले गर्दा टुसा उम्रने र कुहिने सम्भावना कम होस् ।

ध्यान दिनुपर्ने कुरा

यदि आलुमा सानो टुसा छ भने, टुसा र हरियो भाग काटेर मात्र खानुपर्छ । साथै लामो समय भण्डारण गरिएको आलु कुहिएको छ कि भनेर जाँच गर्नुपर्छ ।

टुसा उम्रिएको प्याज सामान्यतया खान योग्य हुन्छ, तर गुणस्तर जाँच गर्नुपर्छ ।  यदि कुहिएको वा गनाउने छ भने खान हुँदैन । यदि टुसा उम्रिएको आलु वा प्याज खाएर असहज महसुस गर्नुहुन्छ भने, तुरुन्त चिकित्सकको सल्लाह लिनुपर्छ ।

-अनलाइनबाट

# भक्तपुरलाई शहरी विकास मन्त्रालयबाट १ अर्ब बढी बजेट, कहाँ कति?

राजेशमान मानन्धर, भक्तपुर । भक्तपुर जिल्लालाई शहरी बिकास मन्त्रालयबाट १ अर्ब बढी बजेट बिनियोजन भएको छ ।

अन्य मन्त्रालयको तुलनामा शहरी बिकास मन्त्रालयबाट भक्तपुरमा सर्वाधिक बजेट आएको हो ।

सो मध्ये पनि भक्तपुर क्षेत्र नं २ मा करिब ७३ करोड २५ लाख बजेट शहरी विकास मन्त्रालयले बिनियोजन गरिदिएको सो क्षेत्रका प्रतिनिधि सभा सदस्य दुर्लभ थापाका स्वकीय सचिव सुभाशिष ढकालले जनाएका छन् ।

नेपाली कांग्रेसका जिल्ला सभापतिसमेत रहेका प्रतिनिधि सभा सदस्य थापाले उपप्रधानमन्त्री एवं शहरी विकास मन्त्री प्रकाशमान सिंहलाई बजेटका लागि धन्यवाद दिएका छन् ।

सिंह स्वास्थ्य लाभको कामना गर्न थापाको निजी निवासमै आएका बेला माग गरिएका बजेट बिनियोजन गरिदिने प्रतिवद्धता प्रकट गरेका थिए । उनले आफ्नो प्रतिवद्धता पुरा गरेका सांसद थापाले प्रतिक्रिया दिए ।

यद्यपि अझै कतिपय योजनामा बजेट छुट्न गएको उनले बताए । प्रदेश सरकार र स्थानीय सरकारले छुटेका योजनाम बजेट बिनियोजन गर्ने उनले बिश्वास ब्यक्त गरेका छन् ।

शहरी विकास मन्त्रालयले सूर्यविनायक- ८ स्थित जगाती-डोलेश्वर सडक हुँदै आशापुरी जाने बाटो र वडा नं ९ स्थित मुसे गणेशथान झोलुंगे पुल हुदै ल्म्म जाने बाटो, सुनपा ९ डोकेखोला देखि रातोमाटे आशापुरी हुदै पनौती जाने सडक स्तरोन्नति कार्य गर्न ५ करोड ३० लाख बिनियोजन गरेको छ ।

सुनपा- ५ को नगास्थान तिनधारा मोनेटोल गणेशमान, बाटिका, तिनधार हुदै अरनिको राजमार्ग निस्कने वडाको मूख्य सडक बाटो सिमानावाल सहित सडक कालोपत्रे गर्न ४ करोड बिनियोजन भएको बताइएको छ ।

वडा नम्बर ६ स्थित आफ्नै बुवा लौह पुरुष गणेशमान सिंहको स्मृतिमा बनेको बाटिकाको लागि मन्त्री प्रकाशमान सिंहले ३ करोड बजेट बिनियोजन गरिदिएका छन् ।

सघन शहरी विकास कार्यक्रम अन्तर्गत मध्यपुर थिमिमा एकीकृत शहरी पुर्वाधार विकास कार्यक्रम लागू गर्न ४ करिड बजेट प्राप्त भएको छ ।

मथिनपा-९ राधे राधे स्थित राधे राधे परिसर सडक कालोपत्रे सहित स्तरोन्नति कार्य गर्न ३ करोड रुपैयाँ बिनियोजन भएको छ ।

मथिनपा वडा नं. १ देखि डिभिजन वन कार्यालय जाने सडक स्तरोन्नती गर्न ३ करोड बजेट ब्यवस्था गरिएको छ ।

मथिनपा-९ निलवाराही परिसर पहिरो नियन्त्रण, वृक्षारोपण तथा मन्दिर परिसर सौन्दर्यीकरण गर्न अर्को ३ करोड छुट्याइएको छ ।

अष्टावक्र फाउन्डेशनको जग्गामा आश्रम निर्माण, सूर्य विनायक नगरपालिकामा पनि ३ करोड बजेट ब्यवस्था भएको छ ।

हेर्नुस् बजेट कहाँ कति ?

चाँ.न.पा.-०५ पकुनेपाटीबाट कालिटार जाने सडक स्तरोन्नति कार्य- ३ करोड

चाँ.न.पा. वडा नं ८ कल्पेश्वर महादेव मन्दिर परिसर तथा आसपासको क्षेत्रमा पुर्वाधार निर्माण कार्य । -३ करोड

भक्तपुर न.पा वडा नं ९, ब्रम्हायणी मन्दिर परिसर तथा आसपासको क्षेत्रमा स्वीकृत गुरुयोजना बमोजिम पूर्वाधार निर्माण कार्य गर्न ३ करोड

सुनपा वडा नं. ६, भक्तपुर चुनदेवी सिमको धारा हुँदै धौवा पाटी जाने सडक स्तरोन्नती - ३ करोड

राधा कृष्ण मन्निबाट आमडोल जाने बाटो स्तरिकरण चक्रपथ, सुनपा १० भक्तपुर - ३ करोड

सुनपा वडा नं. ५ स्थित तिनधारे चौरदेखि वडा नं. ६ स्थित चुनदेवी मन्दिरसम्मको बाटो स्तरोन्नति, भक्तपुर - ३ करोड

सुनपा वडा नं. २ र ३ को सिमानामा ढल बिछ्याउने योजना, भक्तपुर - ३ करोड

सार्वजनिक जग्गा संरक्षण कार्य, सुर्यविनायक, चाँगुनारायण र मध्यपुर थिमी नगरपालिका । - ३ करोड

पाथिभारा टोल जाने मुख्य सडक स्तरोन्नती, चाँ.न.पा. २, भक्तपुर। - ३ करोड

चाँगुनारायण नगरपालिका वडा न २ घट्टेखोला खस्याङ खुसुङ सडक स्तरोन्नति कार्य - ३ करोड

सुनपा वडा नं. ४, भक्तपुर दधिकोट अरनिको माध्यमिक विद्यालयबाट बालमुकुन्दको घर हुदै सिरुटार जाने सडक - ३ करोड

हनुमानघाटदेखि डाँडापाटी हुँदै सूर्यविनायक नगरपालिका वडा नं. १० सल्लाघारी जाने बाटो स्तरोन्नति, भक्तपुर - ३ करोड

सुनपा वडा नं. १,२,३,४ मा पर्ने चरखण्डी ढुङ्गे खोला हुँदै गोदावरी खोला पुग्ने कोरिडोर सडक निर्माण- ३ करोड

भुकम्पीय सुरक्षा पूर्वाधार निर्माण, सुर्यविनायक, चाँगुनारायण र मध्यपुर थिमी नगरपालिका, भक्तपुर। - ३ करोड

विश्व सम्पदा सूचीमा समावेश चाँगुनारायण मन्दिर वरिपरी वृक्षारोपण गरी जंगल संरक्षण गर्ने र सो मन्दिर रहेको थुम्को समेत पहिरो नजाने गरी वरिपरि जग्गा र मनोहरा नदी संरक्षणका लागि पूर्वाधार निर्माण- ३ करोड

मथिनपा श्री द्योमा जगत बृद्धाश्रमको भवन निर्माण - ३ करोड

भक्तपुर न.पा.-७ श्री भैरवी आधारभूत नि.मा.वि. कक्षा भवन स्तरोन्नति पुस्तकालय र प्रयोगशाला निर्माण- ३ करोड

सुनपा वडा नं. १ ढुङ्गेखोलाको पुलदेखि मगर टोलसम्म तथा सिरुटारको हाइवेबाट नागस्थानसम्म जाने वाटो स्तरोन्नति, भक्तपुर- ३ करोड

सुनपा वडा नं. ९ स्थित पलाँसे -डोलेश्वर सडकखण्ड, पिपलबोट खोला हुँदै भाराली पुलसम्मको बाटो स्तरोन्नति, भक्तपुर । - ३ करोड

सहरी सडक विस्तार कार्यक्रम अन्तर्गत जिल्लाको विभिन्न भागमा स्थानीय निकायको सिफारिसमा सडक चौडा गर्ने, टेवा पर्खाल लगाउने, पर्खाल सार्ने तथा सडक स्तारोंनती गर्ने कार्य । - ३ करोड

चाँ.न.पा. वडा नं ९ र भ.न.पा ९ सिमानामा पर्ने मूल साँघु गोंस पुल हुँदै ब्रम्हायणि पुल सम्म दुवै तर्फको किनारामा नदि नियन्त्रण, चा न पा ८ तिमिल्सिना गाउँ देखि एक्ले पोखरी जाने सडक तथा चा न पा ४ वडा कार्यालयबाट हलचाप जाने सडक स्तरोन्नति कार्य । - ३ करोड

चाँ.न.पा. स्थित गुवुखोला-घट्टेखोला कोरिडोर निर्माण (ट्र्याक खोल्ने, पर्खाल लगाउने आदि ), मध्यपुर थिमि न पा ९ राधे राधे परिसर सडक स्तरोन्नति,चा न पा २ बारुदखाना चोकबाट के एम सि होस्टेल हुदै नगरकोट जाने बाटो,सु न पा १० नमूना गणेश वस्तीको सडक स्तरोन्नति - ३ करोड

चा न पा ५ मच्छेनारायण मन्दिर परिसरमा पार्क निर्माण र चा न पा ८ कल्पेश्वोर महादेव मन्दिर परिसरमा पार्क निर्माण- ३ करोड

चाँ.न.पा.६ नगरकोट शान्ति डाडा पार्क निर्माण कार्य तथा चा न पा ४ र ५ को तेलकोट-त्रिशुलडाडा पर्यटन मार्ग निर्माण - ३ करोड

जिल्लाको विभिन्न क्षेत्रमा हरियाली सहितको अपाङ्गमैत्री फुटपाथ निर्माण, चोक सुधार, सम्पदा संरक्षण, मन्दिर निर्माण, सौन्दर्यकरण तथा सम्पदा क्षेत्रमा ढुंगा छाप्ने कार्य -३ करोड

जङ्गम मठ सरक्षण गर्न नै मन्त्रालयले ४ क लाख छुट्याइदिएको छ ।

जिल्लाका विभिन्न सरकारी कार्यालयको मर्मत सुधार माग र आवश्यकता अनुसार - १ करोड ६० लाख

पुनर्लाभ तर्फ बासवारी बाघेश्वरी सडक, भक्तपुर - ४ करोड

सुनपा ४ मा कटुञ्जे कल्भटबाट हनुमन्ते दोभानसम्म जोड्ने सडक स्तरोन्नती कार्य- २ लाख ५० हजार

लोकन्थली टिकाथली सडक खण्डको हनुमन्ते पुलदेखी खरिवोट सम्म सडक स्तरोन्नति कार्य- २ करोड ५० लाख

चाँ.न.पा. ३ झौखेल वोपो खस्याङखुसुङ मिलि टोल मा पूर्वाधार स्तरोन्नति - २ करोड ५० लाख

चाँ.न.पा. वडा नं १ र ३ खडकाडिल चापावोट बांगेमुढा सडक स्तरोन्नती- २५ लाख

चाँ.न.पा. ५ छालिंङ श्री पन्चमहालक्ष्मी उद्यान तथा पूर्वाधार निर्माण कार्य - २५ लाख

चाँ.न.पा. ९ ताथली माथली पुलदेखि राजकुलो बाटो सडक स्तरोन्नति कार्य - ७० लाख

चाँ.न.पा. वडा न ५ विराटस्वरुप मन्दिरबाट गोरखनाथ मन्दिरसम्म पैदल मार्ग निर्माण - २५ लाख

चाँ.न.पा. ८ महाकाली मन्दिर परिसर र पहुच मार्गको पुर्बधार निर्माण- २५ लाख

चाँ.न.पा. वडा न ५ चाँगुनारायण नपा वडा नं. ५ विराट स्वरुप मन्दिरबाट गोरखनाथ मन्दिरसम्म पर्यटकीय पैदल मार्ग निर्माण - ४० लाख

चाँ.न.पा. वडा नं. २ प्रगतिटोलमा सडक ढल नाला स्तरोन्नती कार्य -२५ लाख

भक्तपुर चागुनारायण १ समथली बेंशी भिमसेन गेट देखी मनोहरा खोला सम्म २५ लाख

चाँ.न.पा.-८ कमलमसी क्षेत्रमा स्थित मानव कल्याण आध्यात्मिक प्रतिष्ठानमा विविध पूर्वाधार निर्माण कार्य- ४० लाख

चाँ.न.पा. वडा नं. ३ मा कासन - लुकुटोल सडक स्तरोउन्नति कार्य - २५ लाख

चाँ.न.पा. वडा नं. ५ पकुनेपाटी हुदै कालिटार जाने सडक स्तरोन्नति कार्य - २५ लाख

चाँ.न.पा. वडा न ९ गोठाले चौरबाट बुढाथोकी टोल हुँदै सौडोल निसकने सडक - २५ लाख

चाँ.न.पा. वडा नं -०२ को सुन्तलाबारीबाट वकाडोल जाने सडक को स्तरोन्नति कार्य - ७० लाख

चाँ.न.पा.-०५ भोमिपाटीबाट अगाडी जाने सडक स्तरोन्नति कार्य - २५ लाख

चाँ.न.पा. ८ आरुबारी सडक स्तरोन्नति - २५ लाख

चाँगुनारायण नगरपालिका वडा न २ ४५० एम.एम क्षेत्रको सडक स्तरोन्नती - २५ लाख

चाँ.न.पा. वडा न ४ गडगडे सम्शेर टोल, अवतार टोल हुँदै बाखी गाउँ जोड्ने सडक स्तरोन्नति - ४० लाख

चाँ.न.पा.-८ मा बालमिकेश्वर महादेवस्थान देखी चरेली जोड्ने सडक स्तरोन्नति कार्य - २५ लाख

चाँ.न.पा. वडा नं -०२ को लक्ष्मीनारायण सहकारीको भवन बाट हनुमानटार हुँदै थापागाउँ जाने सडकको स्तरोन्नति कार्य - ४० लाख

चाँ.न.पा. वडा नं. २ मा कासुला टोल - कालोपाटी सडक स्तरोउन्नति कार्य - २५ लाख

चाँ.न.पा. वडा न ३ आचार्यटोल,गयाटोल पूर्वाधार स्तरोन्नति - ४० लाख

चाँ.न.पा. ४ त्रिबेणी चोक बेरौटा पोखरेलगाउँ खेल मैदान जाने सडक स्तरोन्नति - २५ लाख

चाँ.न.पा. ७,८ महादेवस्थान चरेली सडक स्तरोन्नति - २५ लाख

चाँगुनारायण न.पा वडा नं ०५ स्थित श्री महाँकाल मन्दिर परिसर तथा आसपासको क्षेत्रको पूर्वाधार निर्माण कार्य - २५ लाख

चाँ.न.पा. वडा न ७ गैरापाटि बासबारी सडक स्तरोन्नति - ४० लाख

चाँ.न.पा. वडा न ५ गोरखनाथ मन्दिर निर्माण - २५ लाख

गुजोल भित्रि सडक स्तरोन्नति गर्नका लागी आवश्यक, चाँगुनारायण नगरपालिका-४ भक्तपुर - २५ लाख

गोठाले चौरबाट बुढाथोकी टोल हुँदै सऔडोल निसकने सडक, चाँगुनारायण नगरपालिका-९ भक्तपुर - २५ लाख

विराटस्वरुप मन्दिरबाट गोरखनाथ मन्दिरसम्म पैदल मार्ग निर्माण, चाँगुनारायण नगरपालिका-५ भक्तपुर - २५ लाख

भक्तपुर न.पा वडा नं१ भार्वाचो स्थित तकोकिवा (नयाँ बसपार्क) मा बहुउद्देश्ययी भवन निर्माण - २५ लाख

भक्तपुर नगरपालिका वडा न ७ माहाखेल बुद्ब विहार पूर्वाधार स्तरोन्नति -४०लाख

हनुमन्ते रातो पुल भित्रि वाहिरी सडक स्तरोन्नती महालक्ष्मी -५ भक्तपुर - २५ लाख

महेन्द्र माध्यामिक विद्यालय देखि साँगा महादेवको मुर्ति सम्म सडक, भक्तपुर - ४० लाख

मथिनपा वडा न. ७ स्थित वादे चोक दुसिटोलसम्म सडक स्तरोन्नती - २५ लाख

मथिनपा वडा न ९ गौतम ईन्जिनियरिङ्ग देखि कुमार निरौलाको घरसम्मको बाटो स्तरोन्नती- २५ लाख

मथिनपा ठिमीमा मुख्य सडक तथा शाखा सडकमा सडक बत्ती सहित स्तरोन्नति - २५ लाख

मथिनपा वडा नं.१ पावन चोकवाट पश्चिम जाने सडक स्तरउन्नती कार्य - २५ लाख

मथिनपा बडा नं ३,गठ्ठाघरमा नमुना बस्ती चन्द्रबिनायक गणेश मन्दिर क्षेत्रमा सडक स्तरोउन्नति कार्य - २५ लाख

मथिनपा वडा न ७ स्थित बोडे चोकदेखि दुसि डोल सम्म सडक स्तरोन्नति कार्य - ७० लाख

मथिनपा वडा न ३ र ४ को सिमानामा ठिमि व्याङ्केट देखि हनुमन्ते खोला सम्मको सडक( ढल बाटो) निर्माण तथा स्तरोन्नती कार्य - २५ लाख

मध्यपुर युथ एशोशियसन खेल मैदान स्तरोन्नति एवं प्याराफिट निर्माण, भक्तपुर - ७०लाख

राजेन्द्र सिलवालको घर देखि माधव भट्टराईको घर हुँदै शंकर आचार्यको घरसम्मको बाटो स्तरोन्नती, मथिनपा-९ भक्तपुर - २५ लाख

सुनपा ४ मा कटुञ्जे कल्भटबाट हनुमन्ते दोभानसम्म जोड्ने सडक स्तरोन्नती कार्य - २५ लाख

सुनपा तजटोलको चोक-राजकुलो सडक स्तोर्रन्नती - २५ लाख

सु न पा ५ सिर्जनानगर स्थित शान्तीचोक देखी सरस्वती टोलसम्मको दायाँबाँयाको सडक स्तरोन्नति कार्य - २५ लाख

सु.न.पा.४ सगमटोल भित्रको पहिलो दाँया बाँया मोड हुँदै त्रिवेणी चोकसम्म सडक तथा फुलबारी मार्गका सडकहरुमा सडक बत्ती निर्माण तथा स्तरोन्नति - ४० लाख

सुनपा वडा नं ७ गुण्डु किवाचोक अवस्थित भिमसेन मन्दिर परिसर तथा आसपासको क्षेत्रमा पूर्वाधार निर्माण कार्य - ४० लाख

सुनपा वडा नं. ४ सडक ऋषिराम खड्काको घरसम्म जोड्ने सडक स्तरोन्नती - २५ लाख

सुनपा १ मा कसिधन्जु टोलको पिपलबोट हुँदै ठिमी जाने सडक स्तरोन्नति कार्य - २५ लाख

सुनपा वडा नं ८ सिपाडोल स्थित पार्टीभन्ज्याङ देखि परमहंस आश्रमसम्म जाने सडक स्तरोन्नति कार्य - ४० लाख

सुनपा वडा नं ८ सिपाडोल स्थित श्री डोलेश्वर महादेव मन्दिर देखि आशापुर महादेव मन्दिरसम्म जाने सडक स्तरोन्नति कार्य - २५ लाख

सुनपा स्वास्थ्य चौकीबाट भत्केको डोल जाने सडक स्तरोन्नति - २५ लाख

सुनपा ५ कटुञ्जे क्रियापुत्री भवनबाट पाखावारी टोल सडक स्तरोउन्नति कार्य - २५ लाख

कटुञ्जे ५ भक्तपुर सूर्यविनायकमा ढल निर्माण - २५ लाख

टार जाने अन्डोल खोला सरस्वती पाखा ट्रस पुल सुर्यविनायक १, हात्तीगौडा पदमार्ग झो.पु., सु.न.पा. ५ र ७ जोड्ने सुनपा, भक्तपुर - ६० लाख

सुनपा वडा नं. ४ अन्तर्गत महादेव टोलको महादेव चोकदेखि जोगी पाटी जाने र महादेव चोक छेउको पानिटंङ्की बोरिङ्ग देखि जोगी पाटी जाने सडक स्तरोन्नति - ५० लाख

# पोर्चुगलले दोस्रोपटक नेशन्स लिगको उपाधि जित्यो



एजेन्सी । युइएफए नेशन्स लिगको उपाधि पोर्चुगलले दोस्रोपटक आफ्नो नाममा लेखाएको छ । आइतवार म्युनिखमा सम्पन्न फाइनल खेलमा स्पेनलाई पेनाल्टी सुटआउटमा ५-३ ले पराजित गर्दै पोर्चुगलले उपाधिमा पुनः कब्जा जमाएको हो ।

खेलको निर्धारित ९० मिनेट र अतिरिक्त समयमा दुवै टोलीले २-२ को बराबरी खेलेपछि नतिजा पेनाल्टीमार्फत टुंग्याइएको थियो । स्पेनले खेलको २१औं मिनेटमा मार्टिन जुबिमेन्दीको गोलबाट अग्रता लिएको थियो । तर त्यो अग्रता पाँच मिनेटमै नुनो मेंडेसको शक्तिशाली प्रहारले बराबरीमा परिणत भयो ।

४५औं मिनेटमा मिकेल ओयार्जाबालले स्पेनलाई पुनः अग्रता दिलाए । तर ६१औं मिनेटमा क्रिस्टियानो रोनाल्डोले नुनो मेंडेसको पासमा भली प्रहार गर्दै खेललाई पुनः २-२ को अवस्थामा ल्याए । निर्धारित समयमा कुनै टोली विजयी हुन नसकेपछि खेल पेनाल्टीमा पुगेको थियो ।

पेनाल्टी सुटआउटमा पोर्चुगलका गोन्कालो रामोस, वितिन्हा, ब्रुनो फर्नान्डेज, नुनो मेंडेस, र अन्ततः रुबेन नेभेसले सफल प्रहार गरे । स्पेनका आल्भारो मोराटाको प्रहार पोर्चुगलका गोलकिपर डिओगो कोस्टाले रोक्दा खेलको निर्णायक मोड आएको थियो । जित सुनिश्चित भएपछि मैदानको छेउमा रहेका कप्तान रोनाल्डो घुँडा टेकेर खुसीमा आँसु झारिरहेका देखिन्थे ।

यो उपाधिसँगै पोर्चुगल युइएफए नेशन्स लिग दुईपटक जित्ने पहिलो टोली बनेको छ ।

त्यस्तै फ्रान्सले युइएफए नेशन्स लिगमा तेस्रो स्थान हासिल गरेको छ । कप्तान केलियन एम्बाप्पेले आफ्नो ५०औं अन्तर्राष्ट्रिय गोल गर्दै पूरा गरेको खेलमा आइतवार जर्मनीलाई २-० ले हराउँदै फ्रान्स तेस्रो भएको हो ।

रियल म्याड्रिडका सहकर्मी ओरेलियन चुआमेनीको पासमा एम्बाप्पेले ४५औं मिनेटमा उत्कृष्ट फिनिस गर्दै खेलको पहिलो गोल गरे । त्यसै खेल सकिन ६ मिनेट बाँकी छँदा एम्बाप्पेले दोस्रो गोलका लागि पनि योगदान गरे । रविन कोचको गल्तीको फाइदा उठाउँदै एम्बाप्पेले बल माईकल ओलीसेलाई पास गरे । उनले खाली पोस्टमा सजिलै गोल गरे ।

जर्मनीले पनि केही राम्रा अवसरहरू पाएको थियो । तर पेनाल्टी निर्णय र एक गोल दुवै भिएआर द्वारा उल्टाइयो । पहिलोपटक, करिम अडेयेमीलाई फ्रेन्च किपर माइक मेननले लडाउन खोजेपछि पेनाल्टी दिइएको थियो । तर भिएआर पछि अडेयेमीलाई नै डाइभ गरेको आरोपमा पहेंलो कार्ड दिइयो ।

त्यसपछि डेनिज उन्डाभको गोल पनि रद्द गरियो, किनकि खेलको प्रक्रियामा निक्लास फुल्क्रुगले एड्रियन राबियोलाई फाउल गरेको ठहर गरियो । अडेयेमीका तीन प्रयास गोलकिपर माइक मेननले बचाए । फ्लोरियन विट्जको प्रहार पोस्टमा लागेर फर्कियो ।

फ्रान्सले थप गोल गर्न सक्ने सम्भावना पनि थियो । मार्कस थुरामको कर्लिङ प्रहार पोस्टमा लाग्यो । एम्बाप्पेले केही अवसर चुकाए । एकपटक मार्क-अन्द्रे टर स्टेगनले उत्कृष्ट बचाउ गराए ।

जुलियन नेगेल्सम्यानको जर्मनीले लगातार तीन खेल जित्न सकेन । यसअघि सेमिफाइनल पोर्चुगलसँग पराजित भएको थियो।

# नेपाललाई किन १० रन पेनाल्टी ?

काठमाडौं । आईसीसी विश्वकप लिग २ अन्तर्गत स्कटल्याण्डको डन्डीमा भइरहेको त्रिकोणात्मक सिरिजको खेलमा नेपालले नेदरल्याण्ड्सविरुद्धको प्रतिस्पर्धामा दुर्लभ रूपमा १० रन पेनाल्टी खप्नुपर्‍यो।

नेपालले टस हारेर पहिले ब्याटिङ गरिरहेको बेला ब्याट्सम्यान बसिर अहमदले नियमविपरीतको व्यवहार दोहोर्‍याएपछि टोलीलाई १० रनको सजाय दिइएको हो।

घटना खेलको ३७औं ओभरमा सुरू भएको थियो। नेदरल्याण्ड्सका तीव्र गतिका बलर कायल केलिनको बल खेलेपछि बसिर पिचको बीच भाग हुँदै केही अगाडि बढे र फेरि स्ट्राइकमा फर्किए। सुरुमा अम्पायरले कुनै कारबाही नगरे पनि नेदरल्याण्ड्सका अनुभवी खेलाडी रोलेफ भान डर मर्वेले आपत्ति जनाएपछि पाँच रनको पेनाल्टी दिइयो।

त्यसपछि, ४०औं ओभरमा फेरि यस्तै घटना दोहोरियो। यो पटक स्पिनर अर्यान दत्तको दोस्रो बल खेलेपछि पनि बसिर पिचको मध्य भागबाट हिँडे। विपक्षी कप्तान स्कट एडवाड्र्सले अपिल गरेपछि अम्पायरले फेरि पाँच रनको पेनाल्टी थप गरे। नियमअनुसार, पिचको बीच भागबाट जानु अमान्य मानिन्छ, किनभने यसले पिचको अवस्था बिगार्न सक्छ र अम्पायर तथा फिल्डरलाई असहज बनाउँछ।

क्रिकेटको खेलमा अन्य यस्ता कार्य जसले पेनाल्टी निम्त्याउँछन: बलमा थुक लगाउनु, विकेटकिपरले राखेको हेल्मेटमा बल लाग्नु, ब्याट्सम्यानले समय अनावश्यक रूपमा खर्च गर्नु, फील्डिङ टोलीले अवरोध गर्नु, पिच बिगार्ने कार्य, चेतावनीपछि पनि सर्ट रन दौडनु, वा बल टेम्परिङ गर्नु। यसअघि पनि, सन् २०२२ मा टीयू मैदानमा युएईका खेलाडी बासिल हामिदले बलमा थुक लगाउँदा नेपालले पाँच रन पेनाल्टी पाएको थियो।

## भिजिट....

सत्तापक्ष गम्भीर नभएको आरोप लगाए ।

परियारले सदनको गतिरोध खुलाउने बिषयमा पटक पटक छलफल भए पनि सत्तापक्ष गम्भीर नभएको बताए । आफूहरूले उठाएका मागबारे कांग्रेसका नेता असहमत भएपछि सहमतिको वातावरण बन्न नसकेको उनले बताए ।

परियारले भिजिट भिसा प्रकरण सानो घटना नभएकाले छानबिन समिति बनाउने प्रस्ताव गरे पनि सत्तापक्षले गृहमन्त्रीको राजीनामा पनि नआउने र समिति पनि नबन्ने भनेकाले संवादमा बस्नुको कुनै औचित्य नभएको जिकिर गरे ।

त्यसैगरि एमालेका प्रमुख सचेतक महेश बर्तौलाले प्रतिपक्षीको आग्रहमा संसद् बैठक दुई दिनपछि सारिएको बताए ।

ब त ा ै ल ा ल े मंगलबारसम्ममा सहमति खोज्न प्रयास गर्ने प्रस्ताव प्रतिपक्षीले राखेपछि संसद बैठक दुई दिनपछि सारिएको बताए । उनले सत्तापक्ष अधिक लचकताका साथ प्रतिपक्षीसँग सम्वादमा बसेको दाबी गरे ।

प्रतिपक्षीले हौसिएर भिजिट भिसा प्रकरण निकाली सदन अवरुद्ध पारेको भन्दै उनले अब अवरोध हटाउने जिम्मेवारी पनि प्रतिपक्षीकै रहेको बताए । बर्तौलाले प्रतिपक्षी दलसँग सहमतिको कुनै ड्राफ्टमा छलफल नभएको स्पष्ट पारे ।

उनले संवैधनिक आयोगले अनुसन्धान गरिरहेको विषयमा त्यसको निष्कर्ष नआई अन्य कुनै आयोग वा समिति बनाएर छानबिन गर्नु उपयुक्त नहुने बताए ।

## फोनिजद्वारा...

समाचार लेखनमा त्यसको समावेशीकरणको खाँचो रहेको औंल्याएका थिए ।

नेपाल पत्रकार महासंघ भक्तपुरका अध्यक्ष सुन्दर शिल्पकारले पनि यस्ता कार्यक्रमले पत्रकारहरूको दक्षता अभिवृद्धि गर्न महत्वपूर्ण भूमिका खेल्ने बताउनुभयो ।

कार्यक्रमको उद्घाटन सत्र फोनिज बागमती प्रदेश अध्यक्ष युवराज श्रेष्ठको अध्यक्षतामा सम्पन्न भएको थियो भने फोनिज भक्तपुरका सचिव दीपक कायस्थले स्वागत मन्तव्य दिनुभएको थियो ।

तालिमका प्रशिक्षक समिर बालामीले पत्रकारिता क्षेत्रमा कृत्रिम बुद्धिमत्ता (ब्क्ष्) को प्रयोग कसरी गर्न सकिन्छ, त्यसका सम्भावित फाइदा र चुनौतीहरूबारे विस्तृत रूपमा प्रशिक्षण दिनुभयो। उहाँले समाचार लेखन, अनुसन्धान, डाटा विश्लेषण, फ्याक्ट(चेकिङ तथा बहुभाषिक अनुवाद जस्ता क्षेत्रमा एआइले पुऱ्याउन सक्ने योगदानबारे व्याख्या गर्नु भयो। तालिम अन्तर्गत सहभागीहरूलाई व्यावहारिक अभ्याससमेत गराइएको थियो। दुई दिने तालिममा बागमती प्रदेशअन्तर्गतका काठमाडौं, ललितपुर, भक्तपुर, सिन्धुपाल्चोक, काभ्रेपलाञ्चोक, चितवन, मकवानपुर, नुवाकोट, रसुवा, धादिङ, रामेछाप र दोलखा जिल्लाका पत्रकार हरूको उल्लेखनीय उपस्थिति रहेको थियो। सहभागीहरूमा फोनिजका सदस्य पत्रकारहरू लगायत नयाँ प्रविधिमा चासो राख्ने सञ्चारकर्मीहरू सहभागी थिए।

आयोजक संस्थाका अनुसार यस्ता कार्यक्रमले सञ्चारकर्मीहरूलाई एआई प्रविधिसँग आत्मसात् गराउँदै पत्रकारिता क्षेत्रमा नविनता ल्याउन सहयोग पुऱ्याउने विश्वास लिइएको छ ।

## माओवादी....

सुर्यविनायकमा सानुकान्छा आलेमगर र मध्यपुर थिमिमा बिजय कृष्ण श्रेष्ठको नेतृत्वमा नगर समिति निर्वाचित भएको छ ।

समन्वय समिति संयोजक सुनिल गोठे बासुलाई भने प्रदेश समितिले समेत स्वीकार गरी मनोनीत गर्नुपर्ने ब्यवस्था रहेको इन्चार्ज प्रजापतिले जानकारी गराएका छन् । जिल्ला भेलामा माओवादी केन्द्रका स्थायी समिति सदस्य एवं बागमती प्रदेश इन्चार्ज हितमान शाक्यको प्रमुख आतिथ्यता रहेको थियो ।

भेलालाई सम्बोधन गर्दै इन्चार्ज शाक्यले माओवादी केन्द्रले आफ्ना कामहरूको ब्रान्डिङ गर्न नसक्दा जनमत बढ्न नसकेको बताए । "अन्य दलले कृतिमता बेचिरहेछन, हामीले ऐतिहासिक उपलब्धि समेत ब्रान्डिङ गर्न सकेनौ ।" उनले भने ।

त्यस्तै इन्चार्ज शाक्यले माओवादी १० टुक्रामा बिभाजित हुँदा कमजोर बनेको बताउँदै माओवादीबीच एकता हुनसके फेरि जनता उत्साहित हुने र माओवादी केन्द्र पहिलो शक्ति बन्ने बिश्वास ब्यक्त गरे । माओवादी शक्ति कमजोर हुने हो भने देशमा अझै भ्रष्टाचार र कुशासन बढ्ने बताउँदै उनले देशमा सुशासन र समृद्धि माओवादी नेतृत्व बिना सम्भव नभएको जनताले अनुभूति गरिसकेका जिकिर गरे ।

सो अवसरमा केन्द्रीय सदस्य एवम् प्रदेश सांसद देवेन्द्र श्रेष्ठ दिवाकर, केन्द्रीय सदस्य एवं काठमाडौं इन्चार्ज सूर्य सुवेदी पथिक, केन्द्रीय सल्लाहकार एवं बागमती प्रदेश स्कुल बिभाग सहइन्चार्ज डिपी ढकाल, केन्द्रीय सदस्य एवं पूर्व प्रदेश सांसद प्रतिमा श्रेष्ठ, तत्कालीन संविधान सभा सदस्य एवं केन्द्रीय सदस्य उमा कपाली त्यस्तै केन्द्रीय सदस्यद्वय श्रीराम खाइजू र इन्दिरा अधिकारीको पनि आतिथ्यता रहेको थियो । उनीहरूले समसामयिक राजनीतिक र सांगठनिक विषयमा प्रशिक्षण समेत प्रदान गरेका थिए ।

## कला....

जगेर्ना गर्दै यसतर्फ युवाहरूको आकर्षण अभिवृद्धि हुनु सुखद रहेको माननीय थापाको भनाई थियो । बागमती प्रदेश सरकार सामाजिक विकास कार्यालय ललितपुर भैंसेपाटीको लागत साझेदारीमा खलःले सम्पन्न गरेको धिमे बाजा प्रशिक्षणमा ५३ जना युवायुवतीहरु प्रशिक्षित भएको कार्यक्रम संयोजक सुशन प्रजापतिले जानकारी दिए ।

त्यस्तै, मध्यपुर थिमि नगरपालिकाका मेयर सुरेन्द्र श्रेष्ठले नगर क्षेत्रको कला, संस्कृति, बाजागाजा संरक्षणको लागि नगरपालिकाले आवश्यक सहकार्य गर्ने प्रतिबद्धता जनाए । धिमे बाजा, बांसुरी, नौ बाजा, स्वायलि लगायत लोपोन्मुक बाजा संरक्षण गर्नुपर्नेमा जोड दिंदै धिमे बाजा प्रशिक्षण कार्यक्रम आयोजकलाई धन्यवाद दिए ।

त्यस्तै, बागमती प्रदेश सरकारकी सांसद माननीय धनेश्वरी प्रजापतिले बाजागाजाको जगेर्ना गर्ने अभियानलाई निरन्तरता दिनुपर्नेमा जोड दिदैं नेवाः संस्कृतिले नेपाललाई विश्वभर चिनाएको सन्दर्भ कोट्याउँदै उनले सांस्कृतिक समृद्धिको लागि राष्ट्रभक्तहरु एकीकृत हुनुपर्नेमा जोड दिए ।

कार्यक्रममा मध्यपुर थिमिका श्रीगोपाल प्रजापतिलगायत ६ जना थिमि भैलःका गुरुहरु र पाँच जना बाजा गुरुहरुलाई सम्मान गरिएको थियो । औपचारिक बाजा प्रशिक्षण कार्यक्रममा ४ वर्षे बालकदेखि अधैवैंशे पुरुष र महिलाहरु पनि सहभागी रहेको थियो ।

केही दसक अगाडिसम्म महिलालाई धिमे बाजाबाट औपचारिक रुपमा दिक्षित गर्न नहुने मान्यता थियो । महिनावारी भएकी महिलाको उपस्थितिले नाट्यश्वर आह्वान गरिने पूजाविधिमा बाधाविघ्न पैदा हुने बताइन्थ्यो । तर बदलिंदो परिस्थितिसँगै किसली पूजा गरी परम्परागत शैलीले दिइने प्रशिक्षणमा महिला सहभागिता बढ्दै गएको देखिन्छ । धिमे नृत्य तथा बाजा प्रस्तुति समेत गरिएको कार्यक्रममा जनप्रतिनिधि, सुरक्षा निकायका प्रतिनिधि, भैलः नाचका गुरुहरु, संस्कृतिप्रेमी तथा स्थानियबासीहरुको उल्लेख्य सहभागिता थियो ।

## सिथिनख....

पर्बत परिक्रमा गरी आउन आज्ञागरे अनुसार कुमार कार्तिकेय ले ठुलो मेहनत गरी , सबै बिध्न बाधा झेलेर सुमेरु पर्बत सफलता का साथ परिक्रमा गर्न सफल हुनु भएको थियो । श्री कुमार ले यो प्रथम पुज्य को मान पदवी ठूलै पुरुषार्थ गरी प्राप्त गर्नु भएको हो । कुमार कार्तिकेय ले परिक्रमामा आईपरेको सबै बिध्न बाधाहरु हटाएर जितेर कैलाश फर्केर आउन सफल हुनु भएको थियो । त्यस्पछि मात्र महादेव ले कुमार कार्तिकेय लाई कार्य सिद्धि प्रथम पुज्य को बरदान दिनु भएको थियो ।यस्बाट धान बाली को रोपाई "सिनाज्या" समयमा सफल गर्न कुमार कार्तिकेय बाट साहस र प्रेरणा मिलोस भनेर सिथिनख : पर्व मनाउने प्रचलन छ ।यसरी सिथिनख पर्वमा कुमार कार्तिकेय को पूजा गरी साहस र प्रेरणा महत्वपूर्ण पर्व हो ।

२.. दोस्रो महत्वपूर्ण कुरा नेवा समुदाय ले कुमार कार्तिकेय लाई एक तेजस्वी तेज तत्व बाट जन्म लिएर आएको मान्यता राख्दछन् ।कुमार को जन्म शिव पार्वती द्वारा तेज शक्ति प्रवाह गरी तेजस्वी बीर्य पैदा गरी त्यस्बाट जन्म लिएको मान्दछन् ।शास्त्र अनुसार सो तेजस्वी वीर्य अग्निदेव लाई भिक्षाको रुपमा शिव पार्वती ले दिएर पठाएको थियो । सो तेजस्वी बीर्यको ताप सहन नसकि अग्निदेव ले सो बीर्य लाई नदी किनारमा झाड्मि छोडिदिए । त्यो बीर्य ज्यादै तेजस्वी भएको कारण झाड्हिरु को साथ साथै वरिपरिको झारपातहरु पनि बल्न थाले ।यसरी नदीको किनारमा आगो बलेको देखेर सप्त ऋषि का पत्नीहरु मध्येको ६ जना नुहाएर जाडो मानेको बेलामा आगो ताप्न पुगे । सो आगो ताप्नाले ६ जना ऋषि पत्नीहरुमा गर्भधारण भयो । यसरी ऋषि पत्नीहरु ले गर्भधारण गरेको थाहा पाएर ऋषिहरु ले पत्नीहरु लाई निष्कासित गर्ने क्रममा घरबाट निकाले ।ऋषि पत्नीहरुले गर्भधारण गरेको बालक लाई नदीको किनारमा जलमा छोडिदिए ।यसरी नदीमा छोडेको ६ जना तेजस्वी बालकहरुको ६ वटा टाउको जोडेर एक कुमार कार्तिकेय बन्न पुगे । यसरी कुमार कार्तिकेय को जन्म तेजस्वी शक्ति बाट भएको मान्यता छ ।नेवा समुदाय ले यस शक्ति लाई ठूलो महत्व दिएर पुज्ने गर्दछन ।

३.. तेस्रो महत्वपूर्ण कुरा , नेवा समुदाय ले शिव पार्वती को बीर्य ६ वटी ऋषि पत्नीहरुमा गर्भधारण हुन गइ जन्म भएको र तीनै ऋषि पत्नीहरु ले आफ्नु कर्त्तव्य निभाउन ऋषिहरु लाई छोडेर किर्तिका को रुपमा बालक को पालन पोषण गरेका थिए भन्ने मान्यता छ । कुमार कार्तिकेय को जन्म नदीमा भएको भएता पनि कुमार कार्तिकेय को पालनपोषण किर्तिकाहरु बाट भएको हो । कुमार कार्तिकेय को जन्म ठूलो कार्य सिद्ध गर्ने लक्ष लिएर भएको हुनाले किर्तिकाहरुले पालन पोषण को कार्य भार बहन गरेका हुन् भन्ने मान्यता छ । कुमार कार्तिकेय ले साहस गरी सानो उमेरमा नै तारकासुर दैत्य लाई मार्ने संकल्प गरेका थिए ।कृषकहरु ले सिनाज्या को कार्य समयमा सफलताका साथ सम्पन्न गर्न कुमार कार्तिकेय लाई सम्झेर पूजा गर्दा ठूलो साहस र प्रेरणा प्राप्त गर्दछन् भन्ने मान्यता छ ।

४.. चौथो महत्वपूर्ण कुरा नेवा समुदायमा आफ्नु सीप र काम आफ्नु सन्तान लाई आफैले सिकाउने जान्ने बुज्ने पार्ने र दीक्षित बनाउन दीक्षा दिने गर्दछन् । दीक्षित भएपछि मात्र कामको जिम्मा दिएर पठाउंछन् । त्यस्तै आगंछें को आगंद्य को पूजा पनि दीक्षा दिएर मात्र गराउंछन्। शिव पार्वती द्वारा पनि आफ्नु सन्तान कुमार कार्तिकेय लाई युद्ध गर्न सक्षम र निपुर्ण पार्न किर्तिकाहरु कहाँबाट फिर्ता ल्याएर युद्ध गर्न तालिम दिएर निपुण बनाउन युद्ध अभ्यास को तालिम दिन शुरु गरेका थिए । त्यसै सिकाउने क्रममा शिवजी स्वयम् बाट कुमार कार्तिकेय लाई युद्ध बिधि बिधान को तालिम प्राप्त भइ युद्ध अभ्यासहरु मा निपुण भएका थिए । त्यस्पछि कुमार कार्तिकेय ले माता पार्वती बाट युद्ध सम्बन्धित कलाहरु सिकेर शक्ति शस्त्र चलाउन पनि सक्षम भएका थिए ।यसरी कुमार कार्तिकेय लाई बालककालमा नै माता-पिता बाट आबश्यक तालिम प्राप्त भएको थियो ।यही कुरा कृषकहरु लाई पनि खेती किसान को काम त्यस्मा पनि खासगरेर सिनाज्या को काम आफ्नै माता पिता बाट सिकेर आईरहेका छन् ।सो कार्य समयमानै सम्पन्न गर्न कुमार कार्तिकेय बाट हौसला पाउने मान्यता छ ।त्यसकारण पनि सिथिनख : पर्व महत्वपूर्ण छ ।

५.. पाँचौं महत्वपूर्ण कुरा नेवार दर्शन एक समाजिकताबादी सिद्धान्त हो ।नेवा समुदाय ले मानिआएको संस्कृति को दार्शनिक सिद्धान्त ब्यक्तिबादी नभएर समाजिकताबादी सिद्धान्त हो । यो कुराको ज्वलन्त उदाहरण को रुपमा कुमार कार्तिकेय लाई सबै देवीहरु र देवताहरु ले आआफ्नु शास्त्रहरु र शस्त्र अस्त्रहरु पनि दिएर साथ दिएर सहयोग पुर्याएका थिए । त्यस्को साथ साथै सबै देवीहरु र देवताहरु मिलेर आआफुसंग भएको बुद्धि बिबेक र क्षमता अनुसार कुमार कार्तिकेय को रथको भाग भएर साथ दिएका थिए । त्यस्तै नेवा समाजको कुनै पनि कार्य सफल पार्न समाजका सबै सदस्यहरु को सहभागिता मा सबैको कल्याण हुने काम सबै मिलेर गर्ने परम्परा चलिआएको छ ।यसै रुप सिनाज्या सम्पन्न गर्ने बारेमा पनि सबै मिलेर कुमार कार्तिकेय लाई सम्झेर , हिम्मत गरी गर्ने गर्दछन् । त्यस्को लागि पनि सिथिनख पर्व धेरै महत्वपूर्ण छ ।

६.. छैठौं महत्वपूर्ण कुरा , नेवार दर्शन एक संघर्षबादी सिद्धान्त हो । शक्ति प्राप्त गरेर संघर्षमय जीवन सफलताका साथ जिउन सक्षम हुने सिद्धान्त भएको कारण नेवा दर्शन लाई संघर्षबादी सिद्धान्त भनेको हो ।कुमार कार्तिकेय ले सबैबाट शक्ति र सहयोग प्राप्त गरी हिम्मत गरेर तारकासुर संग युद्ध गरी बध गर्न सक्षम भए ।यस्मा कुमार कार्तिकेय सबै देवीहरु र देवताहरु को साथ र पार्वती बाट शक्ति शस्त्र प्राप्त गरी तारकासुर को बध गर्न सक्षम भएका थिए ।

त्यसो त तारकासुर र कुमार कार्तिकेय बिच घमासान युद्ध धेरै बेला सम्म भएको थियो ।कुमार कार्तिकेय ले बिभिन्न शस्त्रअस्त्रहरु प्रयोग गरेर युद्ध गरेका थिए ।अन्तमा तारकासुर ले ब्रह्मा बाट प्राप्त ब्रह्मास्त्र प्रयोग गर्न खोजे। त्यो देखेर कुमार कार्तिकेय ले पनि आफ्नु माता पार्वती बाट प्राप्त शक्ति शस्त्र प्रयोग गरे ।त्यो शक्ति शस्त्र देखेर ब्रह्मास्त्र पनि डराएर आफुलाइ बचाएर भागे ।त्यो देखेर तारकासुर पनि डराएर भाग्न थाले ।सोही मौका छोपेर शक्ति शस्त्र ले खोजेर तारकासुर लाई भेट्टाएर बध गरिदिए ।यस्ले कृषकहरु लाई देवी बाट शक्ति प्राप्त गरी शक्तिमान भएर कार्य सम्पन्न गर्न हौसला बढ्यो ।

यसरी नेवा समुदाय मा कुमार कार्तिकेय को ठूलो महत्व छ र कुमार कार्तिकेय साहस र हौसला को श्रोत हो ।त्यसकारण, कुमार कार्तिकेय को जन्मदिन कुमार षष्ठी ज्यादै महत्वपूर्ण छ । अनि सिंथिनख : पर्व कुमार कार्तिकेय को जन्मदिन को रुपमा मनाउने कारण हो ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com

थिमि TIMES


# "द ब्ल्यू लाइट"को पोस्टरले के गयो संकेत ?

काठमाडौं । चलचित्र 'द ब्ल्यू लाइट'को पोस्टर सार्वजनिक भएको छ । निर्माणपक्षले आइतबार चलचित्रको पोस्टर सार्वजनिक गरेको हो । पोस्टरमा सिनेमाकी मुख्य कलाकारमध्ये एक बेनिशा हमाल छिन् । उनलाई बारमा देखाइएको छ । औंलामा चुरोट च्यापेर बसेकी उनी तनावमा छिन् । निलो लाइटको संयोजन रहेको पोस्टरमा उनको गेटअप, अनुहारमा देखिएको तनाव, अगाडी रक्सीको कप र औंलाको चुरोटले उनी बारगर्ल रहेको संकेत गर्छ ।

कसैले आश्वासन दिएर धोका दिएपछिको तनाव हो कि भन्ने अनुमान लगाउन सकिन्छ । तर यसबारे निर्माणपक्षले प्रष्ट पारेको छैन । बेनिशाका रोल र चलचित्रको कथाबारे विस्तारै खुलाउँदै जाने निर्माणपक्षले जनाएको छ ।

पोस्टरले कतै यो सिनेमाले काठमाडौंको रंगीन नाइटलाइफभित्रको तनाव, त्यसभित्रको डार्क साइड र मनोविज्ञानको कथा त भन्दै छैन भन्ने संकेत गरेको छ । तर, प्रष्ट छैन ।

गत बिहीबारबाट यो सिनेमाको छायांकन सुरु भइसकेको छ । काठमाडौं उपत्यकाभित्रका विभिन्न स्थानमा खिचिने चलचित्रको छायाकंन तालिका २० दिन रहेको जनाएको छ ।

'द ब्ल्यू लाइट'लाई बलिराम चौहानको निर्देशन गरिरहेका छन् । चौहान अहिलेको प्रतिक्षित चलचित्र 'बलिदान'को लेखक तथा मुख्य सहायक निर्देशक हुन् । उनको यो डेब्यु निर्देशन हो । चलचित्रको थिम पोस्टर यसअघि नै सार्वजनिक भइसकेको छ । थिम पोस्टरमा निलो रङले घेरिएको वातावरणबीच एक बालिका उभिएकी छन् । पोस्टरमा बालिकाको कम्मरदेखि माथिसम्मको भाग देखाइएको छ । उनको जुङरुङ्ग कपाल तथा विछिप्त मुद्राबाट चलचित्रको रहस्यमय तथा मनोवैज्ञानिक पृष्ठभूमि झल्किन्छ ।

'द ब्ल्यू लाइट'को प्रमुख भूमिकामा बेनिशासँगै अर्पण थापा, महेश त्रिपाठी, आयुसमान देशराज जोशी, बेनिशा हमाल, सृष्टि श्रेष्ठ, सुरक्षा इटानी छन् । चलचित्रको बाल कलाकारमा ग्रिसमा कटुवाल र सहारा शर्मा छन् ।

साइकोलोजिकल थ्रिलर जनरामा निर्माण हुने चलचित्रलाई स्काइफल पिक्चर्सको प्रस्तुत गर्न लागेको हो । 'द ब्ल्यू लाइट'को को-प्रोडुसरको रुपमा रमन ग्रे रहनेछन्। कार्यकारी निर्मातामा भने छायाकार नरेन्द्र मैनाली र नायिका बेनिशा हमाल रहनेछन् । चलचित्रको छायांकन नरेन्द्र मैनालीको हुनेछ ।

आकाश उखेडा मुख्य सहायक निर्देशक रहेको चलचित्रमा रेलिजा श्रेष्ठ प्रोडक्सन डिजाइनर, दिलीप पन्त निर्माण नियन्त्रक रहेका छन् । 'द ब्ल्यू लाइट' सन् २०२५ भित्रै रिलिज हुने निर्देशक चौहानले बताएका छन् ।

# "महाराजधिराज"मा उषा रजक अनुबन्धित, बलियो स्टारकास्ट

काठमाडौं । निर्देशक परिच्छेद सेनको आगामी नेपाली चलचित्र 'महाराजधिराज' मा अभिनेत्री उषा रजक अनुबन्ध भएपछि फिल्मको मुख्य कलाकार टोली पूरा भएको छ ।

सोमबार निर्माण टिमले रजकलाई चलचित्रको एक प्रमुख भूमिकामा अनुबन्ध गरेको हो । यसअघि नै आर्यन सिक्देल, रमेश उप्रेती, पल शाह र पुष्प खड्का जस्ता चर्चित अभिनेता फिल्ममा फाइनल भइसकेका छन् । अभिनेत्रीको तर्फबाट वर्षा राउत र वर्षा शिवाकोटी पनि मुख्य भूमिकामा अनुबन्ध भएका छन् ।

'महाराजधिराज'ले पुराना र नयाँ पुस्ताका कलाकारहरूलाई मिसाएर दर्शकलाई फरक स्वाद दिने तयारीमा छ । फिल्ममा यसअघि नै जय किशन बस्नेत, गजित विष्ट र आशा पौडेल पनि अनुबन्ध भइसकेका छन् । प्रस्तुतकर्ता विराज बिष्टका अनुसार उषा रजकको अनुबन्धसँगै प्रमुख कलाकारहरूको लाइनअप अन्तिम भएको हो । उनले भने, "हामीले अभिनयमा अनुभवी र चर्चित अनुहारहरूलाई समेटेका छौं । अब केही सहायक भूमिकामा कलाकार चयन बाँकी छ । हाम्रो टोली मजबुत बनेको छ ।"

छत्रेश्वर म्यानेजमेन्ट प्रालिको ब्यानरमा निर्माण हुने यो चलचित्रमा निर्देशक सेन स्वयंको लेखन रहेको छ । उनले यसअघि निर्देशन गरेको सिनेमा 'प्रेमगञ्ज' समीक्षात्मक रुपमा अब्बल ठहरिएको थियो । 'महाराजधिराज'का निर्मातामा टोपेन्द्र विष्ट, चक्रबहादुर केसी र रवि खड्का हुन् । 'महाराजधिराज' आगामी फूलपातीमा देशभर प्रदर्शनमा आउने तयारीमा छ । छायांकन मिति र प्राविधिक टोलीको विस्तृत विवरण चाँडै सार्वजनिक गरिने निर्माणपक्षले जनाएको छ ।

# चलचित्र "मिरमिरे"मा अभिनेता प्रकाश सपूत अनुबन्ध

काठमाडौं । चलचित्र 'मिरमिरे'मा अभिनेता प्रकाश सपूत अनुबन्ध भएका छन् । भेट्रान अभिनेता दयाहाङ राईपछि अभिनेता प्रकाशलाई यो सिनेमामा अनुबन्धित गराएको हो । प्रकाश अहिलेका रुचाइएका कलाकार हुन् । चलचित्र 'मिरमिरे'बाट प्रकाश र दयाहाङले पहिलो पटक सहकार्य गर्ने भएका छन् । अन्य कलाकारबारे हालसम्म यो टिमले जानकारी दिएको छैन । "हामी कलाकारसँग सम्झौताकै क्रममा छौं । केहीसँग कुरा भइरहेको छ," निर्देशक यम शेर्पाले भने, "हामी अहिले बजारले रुचाएका र अभिनयमा पक्कड भएका कलाकारलाई नै लिएर काम गर्नेछौं ।"

प्रकाश यो सिनेमामा अभिनेताका रूपमा मात्रै रहनेछन् वा सांगीतिक पाटोमा पनि जोडिनेछन् भन्नेबारे पछि स्पष्ट पार्ने यमले बताए । चलचित्र राम्रो बनाउन कुनै सम्झौता नगर्ने उनले दोहोऱ्याए । 'मिरमिरे' यमको दोस्रो निर्देशन हो ।

चलचित्र 'कार्साङ' फेम्ड निर्देशक यमले 'मिरमिरे'को कलाकार लाइनअप बलियो हुने बताए । प्राविधिकपक्ष पनि सिनेमाको बलियो हुने उनको भनाइ छ । अभिनेता प्रकाश सपूतले 'मिरमिरे'मा जोडिन पाउँदा खुशी व्यक्त गरे । आफ्नो भूमिका विशेष र महत्वपूर्ण रहेको बताउँदै उनले यस सिनेमाले आफूलाई नयाँ उचाइ दिने विश्वास व्यक्त गरेका छन् । यार्सा फिल्म्सको प्रस्तुति रहने चलचित्रले ग्रामीण परिवेशको सामाजिक कथा भन्ने यमले जानकारी दिए । चलचित्रको निर्देशन सँगै स्टोरी पनि यम शेर्पा स्वयंले लेखेका छन् । निमु शेर्पा, छोङ्बा लामा शेर्पा र आङ्छिरिङ शेर्पा निर्माता रहेको 'मिरमिरे'का सह-निर्मातामा गोविन्द बोहरा र ईश्वर श्रेष्ठ छन् । यो चलचित्रको कार्यकारी निर्मातामा आरआर फिल्मसका सञ्चालक समेत रहेका चलचित्र वितरक रोहित कट्टेल रहेका छन् ।

'मिरमिरे'लाई २०८२ मा रिलिज हुनेछ । प्रदर्शन मिति भने तय भएको छैन । चलचित्रलाई आरआर फिल्मसले वितरण गर्नेछ ।

# "लाज शरणम्" निर्माण टिमको विद्यालयलाई सहयोग

काठमाडौं । चलचित्र 'लाज शरणम्' निर्माण टिमले प्रदर्शनको १०१औं दिन मनाएको अवसरमा विद्यार्थीलाई सहयोग गरेको छ। 'लाज शरणम्' टिमले सिन्धुपाल्चोकको चौतारा सांगाचोकगढी नगरपालिका ५ मा रहेको श्री बालकल्याण आधारभूत विद्यालयमा अध्ययनरत विद्यार्थीहरूलाई ३० थान स्कुल ड्रेस, ब्याग र पानी पिउने बोतल सहयोग गरेको हो ।

मदर किड्स फाउन्डेसन नेपालको आयोजनामा 'लाज शरणम्'का निर्माता नवीन श्रेष्ठले उक्त सहयोग हस्तान्तरण गरेका हुन् । "सफलतापूर्वक प्रदर्शन भइरहेको चलचित्र लाज शरणको गौरवमय १०१ औं दिनको उपलक्ष्यमा हामीले विद्यार्थीहरुलाई सहयोग गरेका छौं । यो अवसरका निम्ति आयोजक मदर किड्स फाउन्डेसन नेपाल र एसीके केटिएम सिन्धु चौतार सिटीलाई धन्यवाद दिन्छु," निर्माता श्रेष्ठले भने, "हामी आगामी दिनमा पनि यस्तो सहयोग गर्दै जानेछौं । सामाजिक काममा सहकार्य गर्दै जानेछौं ।"

कुमार कट्टेलको निर्देशन रहेको चलचित्र 'लाज शरणम्'ले प्रदर्शनको १००औं दिन मनाइसकेको छ । काठमाडौंका दुईवटा सिनेमाहलमा प्रदर्शनको १०१ दिन मनाएको हो ।

शिवरात्रिको अवसर पारेर गत वर्षको फागुन १४ गते सार्वजनिक प्रदर्शनमा आएको चलचित्रले काठमाडौंको न्युरोडमा रहेको रञ्जना सिनेप्लेक्स र गोंगबुस्थित विएसआर मुभिजमा प्रदर्शनको १०१ दिन मनाएको हो ।

चलचित्र 'लाज शरणम्' गत वर्ष कात्तिक १५ गते रिलिज भएको 'पूर्ण बहादुरको सारङ्गी'पछि १०१ दिन मनाउने पहिलो चलचित्र हो ।

'लाज शरणम्'मा सीताराम कट्टेल, विजय बराल, अर्पण थापा, महेश त्रिपाठी, मुकुन्द श्रेष्ठ, विजय लामा, रेणुनाथ योगी, सागर लम्साल, हरि निरौला, अर्जुन घिमिरे, कमलमणि नेपाल, प्रियाना आचार्य, दयाहाङ राई र बुद्धि तामाङलगायतको अभिनय छ । यो चलचित्रमा निर्देशक समेत रहेका कुमार कट्टेल 'जिग्री ब्रो' पनि विशेष भूमिकामा छ ।

जेपीटी क्रिएसनको ब्यानरमा निर्माण भएको चलचित्रका निर्माता नवीन श्रेष्ठ हुन् । राम नरेश शाह र सिर्जना खड्का सह-निर्माता रहेका छन् । आफूले बनाएको चलचित्रले १०१ दिन मनाएपछि निर्माता श्रेष्ठले पहिलो चलचित्रमा दर्शकले दिएको माया र हौसलाले थप उत्साही बनाएको बताएका छन् ।

निर्माता श्रेष्ठले आगामी चलचित्र 'पाँच पाण्डव' चलचित्र निर्माण गर्ने तयारी समेत गरेका छन् । उक्त चलचित्रको पटकथा सुशील पौडेलले तयार गरिरहेका छन् । वसन्त निरौलाले निर्देशन गर्ने तय भएको छ । उक्त चलचित्र आगामी भदौ आसपासमा छायांकन गर्ने तयारी गरिएको उनले बताए । यस्तै निर्माता श्रेष्ठले 'लाज शरणम् २' पनि निर्माणको तयारी भइरहेको जानकारी दिएका छन् ।

# टेलिसिरियल 'बाचा बन्धन'को ट्रेलर सार्वजनिक

काठमाडौं । टेलिसिरियल 'बाचा बन्धन'को ट्रेलर सार्वजनिक गरिएको छ । ३० वर्ष पहिले र अहिले दुई पुस्ता बीचको रोचक ऐतिहासिक प्रेम कथामा बनेको टेली सिरियल 'वाचा बन्धन'को ट्रेलर रिलिज गरिएको छ। नियतिको बन्दी बनेको अमर अजर प्रेम ट्रेलरमा देख्न सकिन्छ ।

ओएसआर डिलिटलमार्फत सार्वजनिक गरिएको ट्रेलरमा सकम्वरी नामले चिनिएकी मोडल कुशुम शर्मा, सरिता ढुङ्गाना, प्रशान्त बुढाथोकी, हेमराज घर्ती, विशाल पहाडी, रश्मि भट्ट सुभाष गजुरेल लगायतका कलाकारलाई देख्न सकिन्छ ।

कमल बुढाथोकीको प्रस्तुति रहेको यो टेलिसिरियललाई दीपा बुढाथोकी, कमल बुढाथोकी मिलेर निर्माण गरेको हो । यज्ञजंग विक (आयुष)को लेखन निर्देशन रहेको यस टेली सिरियलमा हेमराज घर्ती कार्यकारी निर्माता रहेको छ । शिव विकको छायाकंन, उमेश थापा मगरको दृश्य सम्पादन, प्रविण ढकालको कलर, रतिश भारतीको भिएफएक्स, नेत्र विष्टको निर्माण नियन्त्रण, सविन गायकको पोष्टर, आकाश मगरको गीत संगीत एरेन्ज, मुभि प्वाईन्टको पोष्ट प्रोडक्सन अनि लोकप्रिय गायक रामचन्द्र काफ्लेको गायन रहेको छ ।

यो टेलिसिरियल यही जेठ ३१ गते शनिबार ७ बजे ओएसआर डिजिटल युट्युवमार्फत पहिलो भाग सार्वजनिक हुने र प्रत्येक शनिबार साँझ ७ बजे नै दर्शकहरूले 'वाचा वन्धन' हेर्न सक्ने निर्माणपक्षले जनाएको छ । वनिरहेका अन्य टेलिसियल भन्दा उत्कृष्ट र फरक रहेको दावी गरिएको यो सिरियलमा अन्य कलाकारहरूमा प्रेमदेव गिरि, सविन वास्तोला, प्रिया रिजाल, आयुष विसी, यादव गिरि, प्रशान्त मगरलगायत दुई दर्जन नयाँ पुराना कलाकारहरू रहेका छन् । ललितपुरको छम्पि र रुकुम पूर्वीभागको लुगुम नरीबाङको रमणिय दृश्यहरूमा यो टेलिसिरियल छायाकंन गरिएको छ ।




प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३, मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स

Thimi Times Weekly

साप्ताहिक

वर्ष १८ अङ्क ४० ने.सं. ११४५ तछलागा सप्तमी असार ०४ गते बुधबार, २०८२ 18 June 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/-



# विरोधको शैली र सत्ता–विपक्षबीचको असमझदारी संसदमा फरक दृश्य



काठमाडौं । संसद अवरुद्ध गर्दै आएको राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा)को विरोधका बीच संसद सञ्चालन जारी रहँदा राजनीतिक परिस्थिति थप जटिल बन्दै गएको छ । संसद्मा भिजिट भिसा दुरुपयोग प्रकरणको छानबिनको माग गर्दै रास्वपाले लगातार वेल घेर्ने नीति अपनाइरहे पनि सत्तापक्ष भने कारबाहीलाई अगाडि बढाइरहेको छ ।

माओवादी केन्द्र र नेकपा (एस) सत्तापक्षसँग सहमतिमा पुगेसँगै १८ दिनदेखिको संसद् अवरोध केही हदसम्म हटेको देखिए पनि रास्वपाले आफ्नो पाँच बुँदे मागमाथि अडिग रही विरोध जारी राखेको छ ।

सत्तापक्षको दबाब र रास्वपाको अडान

शुक्रबार कांग्रेस र एमालेबीच दुई बुँदे सहमति भएपछि संसद्को नियमित कार्यसूची सञ्चालनमा आएको हो । सो सहमतिमा अख्तियारको छानबिनलाई कुर्ने र अध्यागमनमा देखिएको विकृति हटाउन कानुनी तथा व्यवस्थापकीय उपाय अपनाउने उल्लेख गरिएको छ । तर रास्वपाले गृहमन्त्री रमेश लेखकको राजीनामा र छानबिन समिति गठनको मागलाई बटमलाइन बनाउँदै सदन अवरुद्ध गर्न थालेको हो ।

गत वर्ष जेठ ७ गते पनि कांग्रेसले सहकारी ठगी प्रकरणमा गृहमन्त्री रवि लामिछानेमाथि छानबिनको माग गर्दै संसद अवरुद्ध गरेको थियो । त्यसबेला एमाले, माओवादी र रास्वपा मिलेर प्रधानमन्त्री प्रचण्डलाई विश्वासको मत दिलाएका थिए । अहिले कांग्रेस, एमाले सत्ता पक्षमा छन् र माओवादी विपक्षमा भए पनि संसद सञ्चालनको पक्षमा उभिएको छ ।

रास्वपाका सांसदहरूले आइतबार र सोमबार पनि वेल घेरेर विरोध गरेका छन् । प्रतिनिधिसभामा रास्वपाका २० सांसद छन् (रवि लामिछाने निलम्बित छन) । उनीहरूले वेलमा पलेँटी कसेर नारा लगाउने, ध्यान बस्ने र फोटो खिचाउनेजस्ता शैली अपनाएका छन् । सांसद सुमना श्रेष्ठ त वेलमै योगासन गर्दै गरेकी देखिएकी थिइन् ।

विरोधको शैली र सत्ता-विपक्षबीचको असमझदारी संसदमा फरक दृश्य

रास्वपाले सत्तापक्षका सांसदहरू बोल्दा नारा लगाउँदै अवरोध गरे पनि माओवादी र नेकपा एसका सांसदहरू बोल्दा भने मौन बसेका छन् । बजेटमाथिको लामो छलफलका क्रममा केही सांसदहरू मोबाइल चलाउँदै, डायरी लेख्दै, योगासन गर्दै बसिरहेका दृश्य देखिए । उपसभामुख इन्दिरा राना मगर, जो स्वयं रास्वपाबाट निर्वाचित हुन्, बैठक सञ्चालन गरिरहँदा रास्वपाका सांसदहरूले निरन्तर नाराबाजी गरेका छन् ।

एमाले सांसदहरूद्वारा रास्वपाको विरोध शैलीलाई अशोभनीय ठहर गरिएको छ । दामोदर पौडेल बैरागीले 'सभामुखको आसनअगाडि जुत्ता चप्पल राखेर ध्यान गर्ने शैली संसदीय मर्यादाविपरीत' भएको तर्क गरे भने सूर्य थापाले त संसद् शहीद गेट वा रत्नपार्कजस्तो भएको भन्दै व्यंग्य कसे ।

त्यस्तै राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा)का सांसदहरू मंगलबारको प्रतिनिधि सभाको बैठकमा नीलो रिबन बाँधेर आएपछि संसदमा मर्यादित पोशाकको बारेमा कुरा उठेको छ। प्रतिनिधि सभा बैठकमा कांग्रेस संसदीय दलका प्रमुख सचेतक श्याम घिमिरेले अमर्यादित पोशाक लगाएर आएका सांसदलाई सभामुखले चेतावनी दिनुपर्ने र अझ संसद भवनबाटै निष्काशन गर्नु पर्ने समेतको माग गरेका थिए ।

मानव तस्वरीविरुद्धको प्रतीक भन्दै रास्वपा सांसदहरूले घाँटीमा नीलो रिबन भिरेर आएका थिए । 'संसद् नियमावलीमा सांसदहरूले मर्यादित पोशाक लगाउनुपर्छ भनिएको छ । कतिपय माननीयहरू आज स्कार्प भिरेर आउनुभएको छ' घिमिरेले प्रश्न गरे, 'मर्यादित पोशाकमा यो पर्छ कि पर्दैन ? भोलि कसैले हाफ पाइन्ट लाएर आए के गर्ने ? सभामुखले चेतावनी दिनुपर्छ

बाँकी पेज ७ मा

## दोस्रो अन्तर्राष्ट्रिय मातृभाषा पत्रकारिता सम्मेलन सम्पन्न, सात बुँदे घोषणापत्र जारी




काठमाडौं । दोस्रो अन्तरष्ट्रिय मातृभाषा पत्रकारिता सम्मेलन सम्पन्न भएको छ । ' मातृभाषा संरक्षणका लागि पत्रकारिता' भन्ने मूल नारासहित आयोजित दुईदिने सम्मेलनले सात बुँदे घोषणापत्र जारी गर्दै मातृभाषा पत्रकारितालाई प्रवर्द्धन गर्न संघ, प्रदेश तथा स्थानीय सरकार, तथा अन्तर्राष्ट्रिय संस्थाहरूसँग स्पष्ट आग्रह गरेको छ ।

सम्मेलनमा नेपाल, भारत र बंगलादेशका पत्रकारहरूसहित करिब ५० विदेशी र १०० नेपाली पत्रकारको सहभागिता रहेको थियो । सम्मेलनको आयोजना नेवा: पत्रकार राष्ट्रिय दबूले लिएको थियो भने सार्क जर्नलिष्ट

बाँकी पेज ७ मा

## तीनवटै स्वास्थ्य सेवा सञ्चालन गर्ने पहिलो पालिका : मध्यपुर थिमि



भक्तपुर। मध्यपुर थिमिस्थित पाचो धिमे खल:ले तीन महिने धिमे बाजा प्रशिक्षण समापन तथा सम्मान कार्यक्रम सम्पन्न गरेको छ । कला, संस्कृति तथा परम्परागत बाजा जगेर्ना र संरक्षण गर्ने उद्देश्यले धिमे बाजा प्रशिक्षण दिइएको आयोजकले दाबी गरेको छ । कार्यक्रममा संघीय संसद् अन्तर्गत प्रतिनिधिसभाका सांसद माननीय दुर्लभ थापाले धर्म, संस्कृति र कलालाई संरक्षण गर्ने अभियानमा जुटेका युवाहरुलाई आभार व्यक्त गर्दै आवश्यक ठाउँमा सहयोग गर्ने प्रतिबद्धता जनाए। मौलिकता जगेर्ना गर्दै यसतर्फ युवाहरूको आकर्षण अभिवृद्धि हुनु सुखद रहेको माननीय थापाको भनाई थियो । बागमती प्रदेश सरकार सामाजिक विकास कार्यालय ललितपुर भैंसेपाटीको लागत साझेदारीमा खल:ले सम्पन्न

बाँकी पेज ७ मा

## मध्यपुर थिमि नगरपालिकामा जनप्रतिनिधिका तीन वर्षे कार्यकालको प्रगति विवरण !




भक्तपुर । मध्यपुर थिमि नगरपालिकामा जनप्रतिनिधिहरुको तीन वर्षको कार्यकालमा गरेका विकास निर्माणका फेरिस्त बारे जानकारी गराइएको छ । मध्यपुर सञ्चार समाजले बुधबार मेयरसँग गरेको पत्रकारहरुसँगको सम्वाद कार्यक्रममा नगरप्रमुख सुरेन्द्र श्रेष्ठले १५ पृष्ठ लामो लिखित प्रतिवदेश पेश गरे । प्रतिवेदन बुँदागत रुपमा विभिन्न शीर्षकहरु सहितको प्रगति प्रतिवेदन पढेर सुनाएका थिए ।

पत्रकारहरुसँगको सम्वादमा प्रमुख श्रेष्ठले नगरपालिकाले मध्यपुर थिमिमा रहेको मुर्त अमुर्त सम्पदाहरुको पुनः निर्माण कार्यका साथै सडक, मध्यपुर उज्यालो कार्यक्रम अन्तर्गतका भौतिक निर्माणको कार्यमा उल्लेखनीय प्रगति हासिल गर्नुका साथै सुशासनको क्षेत्रमा समेत नगरपालिकाले उच्चता हासिल गरेको दावी गरे । प्रमुख श्रेष्ठले नगरको ऐतिहासिकस्थलको रुपमा रहेको निलबाराही परिसरमा भैरहेको जनसहभागिताबाट निलबाराहीको पहिरो नियन्त्रण कार्यमा लागेका अभियन्ताहरुको कार्यशैली प्रति असन्तुष्टी जनाउदै अभियन्ताहरुले नगरपालिकाबाट कुनै काम नभएको, सो विषयमा सामाजिक

बाँकी पेज ७ मा

## प्रमाणविनाका आरोपमाथि छानबिन आवश्यक, तर साइबर कानुनको प्रयोग अस्वीकार्य



काठमाडौं । पत्रकार दिलभूषण पाठकद्वारा युट्युबमा प्रसारण गरिएको सामग्रीको विषयमा नेपाल प्रहरीको साइबर ब्युरोले अनुसन्धानका लागि पक्राउ पूर्जी लिएको समाचार सार्वजनिक भएपछि मिडिया तथा सामाजिक सञ्जालमा व्यापक बहस सुरु भएको छ।

पाठकले आफ्नो युट्युब च्यानलमार्फत काठमाडौंस्थित पाँचतारे हिल्टन होटलमा पूर्वप्रधानमन्त्री शेरबहादुर देउवाका छोरा जयवीर देउवाको लगानी रहेको भन्दै गम्भीर आरोप लगाएका थिए। उनले दुबई, अस्ट्रेलिया र क्यानडासम्म जयवीरको रियल स्टेट लगानी रहेको दावी गरे पनि ठोस प्रमाण भने प्रस्तुत गरेका छैनन्। यस्ता दावीहरू "बताइन्छ" जस्ता अस्पष्ट शब्दमा आधारित देखिन्छन्।

पत्रकारिता र आचारसंहिता

पाठकको सामग्री पत्रकारिताको आधारभूत सिद्धान्त विपरीत रहेको देखिन्छ। यदि कसैविरुद्ध गम्भीर आरोप लगाइन्छ भने त्यसमा प्रमाणको आधार आवश्यक हुन्छ। सामाजिक सञ्जालमा आएका आशंका र टिप्पणीलाई आधार बनाएर समाचार बनाउनु मिडियाको धर्म होइन।

यदि जयवीर देउवाले हिल्टन होटलमा लगानी गरेको प्रमाण पाठकले सार्वजनिक गर्न सके, भने त्यो ऐतिहासिक खुलासा हुने थियो र उनको योगदानका लागि पुरस्कार दिन

बाँकी पेज ७ मा

# पतञ्जलिद्वारा किनेको साँगास्थित जग्गा किनबेच मात्र, स्थानीयको गुनासोः आयुर्वेद केन्द्रको आशमा बेचिएको जमिन खाली




पतञ्जलिद्वारा किनेको साँगास्थित जग्गा किनबेच मात्र, स्थानीयको गुनासोः आयुर्वेद केन्द्रको आशमा बेचिएको जमिन खाली

काभ्रे, साँगा - दुई दशकअघि पतञ्जलि योगपीठ तथा आयुर्वेद कम्पनीले "आयुर्वेदिक अस्पताल, औषधि उद्योग, गाई फार्म" जस्ता सामाजिक प्रयोजनका लागि भन्दै काभ्रेको बनेपा नगरपालिका-१४, नासिकास्थानस्थित झण्डै ८१५ रोपनी जग्गा खरिद गरेको थियो। तर, स्थानीय बासिन्दाले फाइदाको आशामा सस्तो मूल्यमा बेचेको उक्त जमिनमा आजसम्म कुनै पनि योजना कार्यान्वयन नभएको भन्दै गहिरो निराशा व्यक्त गरेका छन्।

सस्तो मूल्यमा आश्वासनका भरमा बिक्री, तर आशा अधुरै

स्थानीय बासिन्दा कृष्णबहादुर लामा भन्छन्, "हामीलाई रोजगार, स्थानको विकास र जनजीवन परिवर्तन हुने सपना देखाइयो। तर, अहिले त्यो जमिन बेचबिखनको व्यापार बन्यो। हामी हेरेर बस्न बाध्य छौँ।" त्यस्तै अर्का स्थानीय युवा उतम केसीका अनुसार, "गाउँमै केहि परिवर्तन होला भनेर जग्गा बिक्री गरिएको थियो। तर दुई दशक बितिसक्दा पनि कुनै काम भएको छैन।"

त्यो क्षेत्र अहिले पनि पूर्ण रूपमा खाली छ, कुनै संरचना छैन, खेती वा पशुपालन छैन। जम्मा हरियो घाँस र विरुवा मात्रै छन्।

जग्गा खरिददेखि बिक्रीसम्मको विवादास्पद यात्रा

२०६४ पुस ९ गते पतञ्जलिले काठमाडौंको बौद्ध ठेगाना राखी कम्पनी दर्ता गराएर २०६६ माघ १८ मा ८१५ रोपनी जग्गा खरिद गर्न सरकारसँग निवेदन दियो। त्यसबेला औद्योगिक प्रयोजनका लागि ४ सय रोपनीभन्दा बढी जग्गा लिन नपाइने कानुनी हदबन्दी भए पनि 'सामाजिक संस्था' भनेर नियम फेरेर छुट दिइयो।

तर, खरिद गरिएको सो हदबन्दी छुटको जग्गा २०६७ असार ११ मा 'काष्ठमण्डप बिजनेस होम्स' नामक कम्पनीलाई ३५३ रोपनी १५ आना बिक्री गरियो। मालपोतका अभिलेख अनुसार, यस बिक्रीबाट उठेको ४ करोड २२ लाख रुपैयाँमध्ये जम्मा १ करोड ७ लाख रुपैयाँ बराबरको मात्र नयाँ जमिन पुनः खरिद गरिएको पाइएको छ।

सरकारी निर्णय र प्रशासनिक हस्तक्षेप

त्यसबेला प्रधानमन्त्री माधवकुमार नेपालको नेतृत्वमा मन्त्रीपरिषद्ले पतञ्जलिलाई हदबन्दी छुटको अनुमति दिएको थियो। भूमिसुधार विभागका तत्कालीन महानिर्देशक केशरबहादुर बानियाँले उक्त निर्णय असंवैधानिक भन्दै कार्यान्वयन नगर्ने निर्णय गर्दा उनलाई पदबाट हटाइयो र नयाँ महानिर्देशकबाट निर्णय लागू गराइयो।

अख्तियारको हस्तक्षेप र मुद्दा दायर

२०८२ जेठ २२ गते अख्तियार दुरुपयोग अनुसन्धान आयोगले पूर्वप्रधानमन्त्री माधवकुमार नेपालसहित ९३ जनाविरुद्ध १८ करोड ५८ लाख ५० हजार बिगो कायम गर्दै भ्रष्टाचार मुद्दा दायर गर्यो। मुद्दामा पतञ्जलिद्वारा बिक्री गरिएका जमिनहरू व्यावसायिक प्रयोजनका लागि प्रयोग गरिएकाले सामाजिक प्रयोजनमा छुट दिएको आधारमै त्रुटि रहेको उल्लेख छ।

अहिलेको अवस्था र स्थानीयको चिन्ता

वडा अध्यक्ष टुल्कु लामाका अनुसार पछिल्लो तीन वर्षमा वडा कार्यालयमा कुनैपनि किसिमको सिफारिस माग आएको छैन र हाल बिक्री रोकिएको देखिन्छ। यद्यपि, बिक्री भइसकेको जमिन हाल ११८ जनाको नाममा कित्ताकाट भई निजी स्वामित्वमा पुगिसकेको छ।

ललितानिवास प्रकरणजस्तै दोहोरिन्छ त?

विश्लेषकहरू भन्छन्– यो प्रकरण बालुवाटारस्थित ललितानिवास जग्गा घोटालासँग मिल्दोजुल्दो देखिन्छ, जहाँ सामाजिक वा सरकारी प्रयोजनका लागि छुट दिइएका जग्गा निजी स्वामित्वमा गइ व्यावसायिक प्रयोजनमा प्रयोग गरिए। अब प्रश्न उठेको छ- के पतञ्जलिको नाममा छुट पाएको जमिन फिर्ता हुन सक्छ? वा निजी नाममा बँटिइसकेको जमिन अब सधैंका लागि हराउँछ?

यो विषय अब अदालतको फैसलाले मात्र टुंगो लगाउनेछ।

# वृद्धवृद्धालाई सीप विकास तालिम : आत्मनिर्भर बनाउने पहल



मध्यपुर थिमि । न्हापांगु पलाः नेवाः मिसा ग्वहालि पुचःले जेष्ठ नागरिक लक्षित सीप विकास तालिम सम्पन्न गरेको छ । बागमती प्रदेश सरकार, सामाजिक विकास मन्त्रालय तथा सामाजिक विकास कार्यालयको साझेदारीमा सम्पन्न तालिमको उद्देश्य वृद्धवृद्धाहरूलाई आंशिक रूपमा आत्मनिर्भर बनाउनु रहेको थियो ।

मध्यपुर थिमि-८ बोदे स्थित कुमारी पार्कमा आयोजित समापन कार्यक्रममा सांसद नुरज बज्राचार्य, वडा अध्यक्ष रमेश थापा श्रेष्ठ र नेपाली सेनाका मेजर पूर्ण प्रजापतिले सहभागी ४२ प्रशिक्षार्थीलाई प्रमाणपत्र वितरण गरे । सोही अवसरमा समूहको स्थापनादेखि सक्रिय योगदान दिँदै आएकी प्रमिला बज्राचार्यलाई सम्मान गरिएको थियो ।

तालिममा सहभागी वृद्धवृद्धाहरूलाई डोला, बोटा, लप्ते (पातबाट बनेको नेवा भ्वय् लगायत नेवाहरुको धार्मिक तथा शुभकार्यमा पयोग गरिने बस्तु) तथा सुकुल बनाउन सिकाइएको थियो । समूहकी अध्यक्ष शिला सायमिका अनुसार, ३२ जनालाई लप्ते सिलाई, २० जनालाई सुकुल बुन्ने र १० जनालाई दुवै सीपको तालिम दिइएको हो । सहभागीहरूमा ६० वर्षदेखि ८२ वर्षमाथिका भिमरथारोहण गरेका जेष्ठ नागरिक पनि सामेल थिए ।

तालिम वैशाख ७ गते सुरु भई जेठ ३० गते सम्पन्न भएको हो । समापन कार्यक्रम असार ३ गते सम्पन्न गरिएको थियो । तालिममा ललितपुर थसिस्थित सुजाता महर्जनले सुकुल बुन्ने र काठमाडौंकी पटनादेवी रञ्जितले लप्ते बनाउने तालिम दिएकी थिइन् ।

न्हापांगु पलाः नेवाः मिसा ग्वहालि पुचःले विगत १० वर्षदेखि वृद्धवृद्धाहरूका लागि दिवा हेरचाह सेवा सञ्चालन गर्दै आएको छ । संयुक्त परिवारमा बस्ने वृद्धवृद्धा पनि छोराबुहारी र नातीहरू काम र अध्ययनमा व्यस्त हुँदा घरमा एक्लिनुपर्ने अवस्थालाई ध्यानमा राख्दै समूहले उनीहरूलाई सामाजिक रूपमा सक्रिय बनाउन कथा सुनाउने, संवाद गर्ने र घुमाउन लैजाने कार्यक्रमसमेत सञ्चालन गर्दै आएको छ । संगठनले हालै "रु. १०० अभियान" सुरु गर्दै जेष्ठ नागरिक सामुदायिक भवन निर्माणका लागि प्रतिव्यक्ति रु. १०० योगदान गर्न अपिल गरेको छ।

# अपाङ्गता भएका आदिवासी जनजातिलाई परम्परागत दुना–टपरी बनाउने सीप तालिम



सिन्धुली, मरिण – परम्परागत ज्ञानमा आधारित दुना-टपरी बनाउने १५ दिने विशेष तालिम पाएपछि सिन्धुली मरिणका अपाङ्गता भएका आदिवासी जनजातिहरू उत्साहित भएका छन्। उनीहरूलाई आर्थिक सशक्तिकरण र आत्मनिर्भर जीवनयापनमा यस तालिमले सहयोग पुऱ्याउने विश्वास लिएको छ।

नेपाल आदिवासी जनजाति अपाङ्ग संघ (निडा) सिन्धुलीले मरिण गाउँपालिका-१, कात्तिकेमा आयोजना गरेको तालिममा २६ जना अपाङ्गता भएका व्यक्ति र तिनका अभिभावकहरूको सहभागिता रहेको थियो। तालिममा सहभागीहरूलाई साल र भोर्ला पातबाट दुना-टपरी बनाउने परम्परागत सीपसँगै आधुनिक उपकरणको प्रयोगसमेत सिकाइएको थियो।

परम्परागत सीपको संरक्षण र व्यवसायिक सम्भावना

निडा सिन्धुलीका अध्यक्ष जीवन राना मगरका अनुसार लोपोन्मुख अवस्थामा पुगेको दुना-टपरी बनाउने परम्परागत सीपलाई संरक्षण गर्दै स्थानीय अपाङ्गता भएका व्यक्तिहरूलाई स्वरोजगारमुखी बनाउने उद्देश्यले तालिम आयोजना गरिएको हो। बिवाह, भोज र पूजा-अनुष्ठानजस्ता सांस्कृतिक कार्यमा प्रयोग हुने दुना-टपरी पछिल्लो समय प्लास्टिकको प्रयोग बढेसँगै ओझेलमा परेका छन्।

तालिममा प्रविधिको प्रयोग

प्रशिक्षक भावना पुलामी मगरका अनुसार तालिममा पात छानेर ग्रेडिङ गर्ने, आकर्षक डिजाइमा ढाल्ने र हाइड्रोलिक मेसिनको प्रयोग गरेर गुणवत्तायुक्त उत्पादन तयार पार्ने सीपमा सहभागीहरूलाई दक्ष बनाइएको हो। उनले दुना-टपरी बजारमा राम्रो माग रहेको र यसको उत्पादनले होटल तथा रेष्टुरेन्टमा प्लास्टिकको विकल्प दिन सक्ने सम्भावना औँल्याइन्।

प्रेरणादायक सहभागिता र प्रतिक्रियाहरू

तालिममा सहभागी विष्णु माया बल तामाङ, जो एक खुट्टाबाट अपाङ्ग हुनुहुन्छ, भन्नुहुन्छः "दुना-टपरी पनि विक्री हुन्छ भन्ने थाहा थिएन। अब यो सीपबाट कमाइ गर्न सकिने बाटो खुलेको छ।" अर्की सहभागी विनिता आले मगरले अपाङ्गता भएकाहरू सिर्जनात्मक काममा सक्षम रहेको प्रमाणित भएको बताइन्।

स्थानीय सरकारको प्रतिक्रिया र प्रतिबद्धता

मरिण गाउँपालिका वडा नम्बर १ का अध्यक्ष हिरा बहादुर गुर्मछानले निडाको पहलबाट आफू प्रेरित भएको भन्दै आगामी आर्थिक वर्षमा अपाङ्गता भएका व्यक्तिहरूका लागि थप कार्यक्रमसहित बजेट ल्याइने प्रतिबद्धता जनाउनुभयो।

आदिवासी ज्ञानको सम्मान र संरक्षण आवश्यक

नेपाल आदिवासी जनजाति महासंघ बागमती प्रदेश अध्यक्ष काजीमान थिङले आदिवासी ज्ञानको संरक्षणले आर्थिक र सांस्कृतिक दुवै लाभ पुऱ्याउने धारणा राख्नुभयो। त्यस्तै, अधिवक्ता तथा अभियन्ता दिलप्रसाद थापा मगरले जलवायु संकट समाधानमा परम्परागत सीपको आधुनिक प्रविधिसँग संयोजनले प्रभावकारी परिणाम दिन सक्ने बताउनुभयो।

यस तालिमले परम्परागत ज्ञानको पुनरुत्थान र अपाङ्गता भएका आदिवासी समुदायको जीवनस्तर उकास्न सक्ने संकेत देखाएको छ।

# सूर्यविनायकः भक्तपुरको पहिलो पूर्ण खोप सुनिश्चित नगरपालिका घोषित

भक्तपुर । भक्तपुरको सूर्यविनायक नगरपालिका जिल्लामै पहिलोपटक पूर्ण खोप सुनिश्चित नगरपालिका घोषित भएको छ । जिल्लाका चारवटा नगरपालिकामध्ये सूर्यविनायकले यो उपलब्धि हासिल गर्दै खोप अभियानमा उदाहरणीय सफलता प्राप्त गरेको हो ।

स्वास्थ्य शाखाद्वारा आयोजित कार्यक्रममार्फत २०८१/०८२ को पूर्ण खोप सुनिश्चितता तथा दिगोपना घोषणा कार्यक्रम सम्पन्न गरिएको थियो । कार्यक्रममा नगर प्रमुख बासुदेव थापाले सम्पूर्ण स्वास्थ्यकर्मीलाई खोप सुनिश्चितताको शपथ गराउनुका साथै विभिन्न स्वास्थ्य संस्थाका प्रमुखहरूलाई प्रमाणपत्र प्रदान गरे ।

नगर प्रमुख थापाले सामूहिक प्रयास र समर्पणका कारण यो उपलब्धि सम्भव भएको उल्लेख गर्दै, सबैलाई धन्यवाद ज्ञापन गरे । उनले नगरका हरेक वडामा कुनै पनि बालबालिका खोपबाट बन्चित हुनु नपरेको सुनिश्चित गरिएको र त्यसको अनुगमनपछिको पुष्टि आधारमा खोप मुक्त नगर घोषणा गरिएको दाबी गरे ।

कार्यक्रममा नगर प्रवक्ता रविन्द्र सापकोटाले नगरपालिकाले जन्मदेखि मृत्युसम्म नागरिकलाई आवश्यक सेवा उपलब्ध गराउने प्रतिबद्धता जनाए । उनले खोप अभियानदेखि शव वाहन व्यवस्थासम्मको सेवा नगरपालिकाले उपलब्ध गराउँदै आएको उल्लेख गरे ।

जिल्ला जनस्वास्थ्य कार्यालय भक्तपुरकी प्रमुख अञ्जना खड्काले भक्तपुरका चारै नगरपालिका पूर्ण खोप सुनिश्चितताका अन्तिम चरणमा रहेको जानकारी दिइन् । उनले भक्तपुर चाँडै नै बागमती प्रदेशकै पहिलो पूर्ण खोप सुनिश्चित जिल्ला बन्ने तयारीमा रहेको विश्वास व्यक्त गरिन् ।

कार्यक्रममा सूर्यविनायक नगरपालिकाका १ देखि १० सम्मका वडाध्यक्षहरू, स्वास्थ्य चौकी प्रमुखहरू र अन्य स्वास्थ्यकर्मीहरूको उपस्थिति रहेको थियो ।

# डुबानको जोखिम न्यूनीकरण गर्न उपत्यकाका खोला–नदी सफा अभियान तीव्र



काठमाडौं उपत्यकाका बागमती, विष्णुमती, रूद्रमती लगायतका नदी तथा खोलाहरूमा अहिले तीव्र रूपमा सफाइ अभियान चलिरहेको छ। विभिन्न ठाउँमा एक्स्काभेटर प्रयोग गरेर नदीभित्र पसेर थुप्रिएका फोहोर र नदीजन्य पदार्थहरू हटाइँदै छन्। यो अभियान दिन-रात जारी छ।

पछिल्ला केही हप्तादेखि सुरु भएको यो कामलाई सधैंजस्तो सरसफाइ अभियानको रूपमा मात्र होइन, डुबान न्यूनीकरणका लागि आवश्यक पूर्वतयारीका रूपमा पनि हेरिएको छ। नेपालमा यस वर्ष औसतभन्दा १५ दिनअघि नै मनसुन प्रवेश गरिसकेको छ। यद्यपि, हालसम्म देशभर फैलिन सकेको छैन। अहिले पूर्वी लुम्बिनी क्षेत्रमा मात्र सक्रिय रहेको देखिन्छ।

हालसम्म मनसुन सुरु भएयता करिब १०९ मिलिमिटर वर्षा भइसकेको छ, जुन वार्षिक औसतको ७.४ प्रतिशत हो। मौसम पूर्वानुमान अनुसार यो वर्ष औसतभन्दा बढी वर्षा हुने सम्भावना ६५ प्रतिशत रहेको छ। यही सम्भावित बढी वर्षाले पुनः अघिल्लो वर्षझैँ डुबान निम्त्याउन नदिन खोला सफा अभियान तीव्र बनाइएको हो।

गत वर्ष मनसुनका बेला काठमाडौं उपत्यकाको थुप्रै क्षेत्र डुबानमा परेको थियो। विष्णुमती, बागमती, कर्मनासा लगायत नदीकिनारका बस्तीहरू प्रभावित भएका थिए। थापाथली, बल्खु, तरकारी बजार क्षेत्र सधैंजसो बाढीमा पर्ने हुँदा यसपालि बेलैमा सफाइ थालिएको अधिकारसम्पन्न बागमती सभ्यता एकीकृत विकास समितिका उप-आयोजना निर्देशक उद्धव नेपालले जानकारी दिए।

उनका अनुसार हालसम्म एक लाख घनमिटरभन्दा बढी नदीजन्य सामग्री र फोहोर हटाइएको छ। त्रिभुवन विश्वविद्यालयदेखि सुन्दरीघाटसम्म ७१ हजार घनमिटर, बागमती-विष्णुमती दोभान क्षेत्रबाट १५ हजार र गोकर्णेश्वर तटीय क्षेत्रबाट १७ हजार घनमिटर फोहोर तथा बालुवा हटाइएको छ।

काठमाडौं महानगरपालिकाले पनि यो अभियानमा सक्रिय भूमिका खेलेको छ। हालसम्म ४२.१ किलोमिटर खोला क्षेत्र सफा गरिएको र ६ वटा एक्स्काभेटरमार्फत करिब दुई हजार टिपर नदीजन्य सामग्री निकालिएको जानकारी महानगरको वातावरण व्यवस्थापन विभागका इन्जिनियर रामप्रसाद नेपालले दिए। उनका अनुसार सात वटा खोलामा हेभी मेशिन प्रयोग गरिएको छ भने भचाखुसी र चुनदेवी खोलामा जनशक्ति परिचालन गरिएको छ।

त्यस्तै, करिब ४३ किलोमिटर सडककिनारा र नालाहरू पनि सफा गरिएको छ। खोला-खोल्सीको सतहमा थुप्रिएको ढुंगा, बालुवा र फोहोरले बस्तीमा बाढी पस्ने जोखिम भएकाले ती सामग्री हटाइएको हो।

सहरी विकास मन्त्रालयले चोभारमाथिको बोल्डर हटाउने तयारी गर्दैछ, जसका लागि नेपाली सेनाको सहयोग लिइने भएको छ।

तर, खोला-नदीमा ढल मिसाउने समस्या अझै कायम छ। यसले एक्कासि बहाव बढ्ने खतरा निम्त्याउन सक्छ। त्यसलाई ध्यानमा राख्दै विपद् जोखिम न्यूनीकरण तथा व्यवस्थापन प्राधिकरणले स्थानीय तहलाई आफ्नो क्षेत्रभित्र खोला अवरोधको अनुगमन र मनसुन प्रतिकार्य योजना व्यवस्थित गर्न निर्देशन दिएको छ।

प्रवक्ता रामबहादुर केसीका अनुसार उपत्यकाका डुबानप्रवण क्षेत्रलाई लक्षित गरेर समन्वयमा आधारित मनसुन प्रतिकार्य योजना बनाइएको छ। यसपटक तयारीमा कुनै कमी नहुने उनले बताए।

# अन्टार्कटिकाको बरफमुनिबाट निस्कने रहस्यमय रेडियो तरंगले वैज्ञानिक चकित



काठमाडौं। अन्टार्कटिकाको बरफमुनिबाट उत्पन्न भएका अनौठा रेडियो तरंगहरू वैज्ञानिकहरूका लागि एक गहिरो रहस्य बनेका छन्। पेन्सिलभेनिया विश्वविद्यालयका अनुसन्धानकर्ताहरूको टोलीले यो संकेतहरू भौतिक विज्ञानको वर्तमान ज्ञानलाई चुनौती दिने खालका रहेको बताएका छन्।

फिजिकल रिभ्यु लेटर्स जर्नलमा प्रकाशित अध्ययनअनुसार, अन्टार्कटिक इम्पल्सिभ ट्रान्जियन्ट एन्टेना (ब्ल्क्त्ब) नामक उपकरणद्वारा यी रहस्यमय रेडियो तरंगहरू पत्ता लागेका हुन्।

एनडीटिभीको रिपोर्टअनुसार, यी संकेतहरू वैज्ञानिकहरूमा पुग्नुअघि हजारौं किलोमिटर चट्टानी भाग पार गर्दै आएका छन्। सामान्यतः त्यस्तो दूरीबाट रेडियो संकेतहरू विकृत भएर पत्ता लगाउन असम्भवजस्तै हुन्छ। तर, कुनै रहस्यमय तरिकाले यी संकेतहरू डिटेक्टरमा देखा परेका हुन्।

ब्ल्क्त्ब टोलीकी सदस्य तथा खगोल भौतिकशास्त्रकी सह-प्राध्यापक स्टेफनी विसेलका अनुसार, “हामीले देखेका रेडियो तरंगहरू बरफको सतहभन्दा ३० डिग्री तलको तीव्र कोणमा आएका थिए, जुन सामान्य अवस्थामा सम्भव हुँदैन।”

वैज्ञानिकहरूले यस्ता संकेतहरू न्यूट्रिनो खोज्ने क्रममा गल्तिले पत्ता लगाएका हुन्। न्यूट्रिनोहरू अत्यन्त सानो पिण्ड भएका, कुनै आवेश नभएका उप-परमाणविक कणहरू हुन्, जुन सूर्य, सुपरनोभा वा बिग ब्याङ्ग जस्ता उच्च-ऊर्जा ब्रह्माण्डीय घटनाहरूबाट उत्सर्जित हुने गर्छन्।

तर, यी फेला परेका रेडियो तरंगहरू न्यूट्रिनोका प्रतिनिधि नभएको वैज्ञानिकहरूले बताएका छन्। विसेलले भनिन्, “यी संकेतहरूको वास्तविक प्रकृति अझै स्पष्ट छैन, तर यिनीहरू न्यूट्रिनो होइनन् भन्ने हामीलाई थाहा छ।”

उनका अनुसार, “बरफ नजिक र क्षितिज क्षेत्रमा केही अनौठा रेडियो तरंग प्रसारण प्रभाव हुनसक्छन् भन्ने अनुमान गरे पनि त्यसको पूर्ण बुझाइ हामीसँग छैन।”

हाल वैज्ञानिकहरू नयाँ उपकरण 'पीयूईओ' (एग्भ्इ) मार्फत यस्ता संकेतहरूको खोज तथा रहस्य समाधान गर्ने तयारीमा छन्। “पीयूईओसँग उच्च संवेदनशीलता हुनेछ र हामीले थप संकेतहरू फेला पार्नेछौं भन्नेमा म आशावादी छु,” विसेलले बताइन्।

यो घटनाले ब्रह्माण्डका गहिरा रहस्यहरू बुझ्न नयाँ ढोका खोल्ने आशा गरिएको छ।

# विनायकमा वादविवाद र हिज्जे प्रतियोगिता सम्पन्न

भक्तपुर । विनायक शिक्षा निकेतन इङ्लिस स्कुलले मासिक कार्यतालिका अनुसार वादविवाद तथा हिज्जे प्रतियोगिता आयोजना गरेको छ । विद्यालयको विनायक साहित्यिक क्लबको संयोजनमा र अतिरिक्त क्रियाकलाप समितिको व्यवस्थापनमा सम्पन्न सो कार्यक्रम विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्र विक्रम प्रजापतिको प्रमुख आतिथ्यता तथा सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाको विशेष उपस्थिति रहेको थियो ।

कार्यक्रममा कक्षा ४ देखि ७ सम्मका विद्यार्थीहरूको सहभागितामा हिज्जे प्रतियोगिता तथा कक्षा ८, ९ र १० का विद्यार्थीहरूबीच “प्रविधिले विद्यार्थीको पढाइमा असर गर्छ” भन्ने शीर्षकमा वादविवाद प्रतियोगिता सञ्चालन गरिएको थियो ।

वादविवाद प्रतियोगिताको निर्णायक मण्डलमा विद्यालयका शैक्षिक संयोजक शैलेन्द्र भट्टराई तथा अंग्रेजी शिक्षक कृष्ण पन्थी रहेको थियो । कार्यक्रमको समापनमा आयोजित पुरस्कार वितरण समारोहमा प्रमुख अतिथि प्रिन्सिपल प्रजापतिले विद्यार्थीको अन्तर्निहित प्रतिभा उजागर गर्न यस्ता अतिरिक्त कार्यक्रमहरूले महत्वपूर्ण भूमिका खेल्ने बताउँदै भविष्यमा अझ धेरै सिर्जनात्मक अवसरहरू प्रदान गरिने आश्वासन दिए ।

वादविवाद प्रतियोगितामा प्रथमः अमृता गोले (कक्षा १०), द्वितीयः कृषा प्रजापति, तृतीयः तुलज प्रजापति र सान्त्वनाः सुजिना कुम्पाखा भएका थिए । यस कार्यक्रममा विद्यार्थीको प्रस्तुतिले भाषा क्षमता, सोच्ने शैली र आत्मविश्वास अभिवृद्धिमा सकारात्मक प्रभाव पार्ने विश्लेषण गरिएको छ ।

यस प्रकारका अतिरिक्त क्रियाकलापहरूले विद्यालय शिक्षालाई पाठ्यपुस्तकको सिमितताबाट बाहिर ल्याई व्यवहारिक तथा जीवन उपयोगी बनाउने काम गर्दछ । हिज्जे प्रतियोगिताले भाषाको विकासमा अभ्यस्त गराउँछ भने वादविवादले तार्किक क्षमता र सार्वजनिक स्थलमा बोल्ने सीपको अभिवृद्धि गर्छ । विनायक शिक्षा निकेतनको यस्तो प्रयासले विद्यार्थीमा नेतृत्व, अभिव्यक्ति र प्रतिस्पर्धात्मक सोच विकास गर्ने सम्भावना प्रस्ट देखिन्छ ।

# ट्रम्पपछि अब चीनको चेतावनी : आफ्ना नागरिकहरूलाई इजरायल छोड्न आग्रह

एजेन्सी । इजरायल युद्ध आज पाँचौं दिनमा प्रवेश गरेको छ र दुबै देश एक-अर्कामाथि मिसाइल तथा ड्रोन आक्रमण गर्दै छन् । यहीबीच, पूर्व अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले तेहरान खाली गर्न चेतावनी दिएको केही समयपछि चीनले पनि आफ्ना नागरिकहरूलाई तत्काल इजरायल छोड्न आग्रह गरेको छ । यी घटनाक्रमले विश्वस्तरमै तनावको अवस्था सिर्जना गरेको छ र युद्ध झनै भयावह रूप लिने संकेत देखिएको छ ।

इजरायलले २०२५ जुन १३ मा 'अपरेसन राइजिङ लायन' नामक कारबाहीमार्फत ईरानका परमाणु तथा सैन्य संरचनाहरूमा आकस्मिक आक्रमण सुरु गऱ्यो । यस आक्रमणमा ईरानका उच्च सैन्य कमाण्डर र वैज्ञानिकको मृत्यु भएको दावी गरिएको छ । जवाफस्वरूप ईरानले सयौं मिसाइल र ड्रोनमार्फत इजरायलमा प्रतिकार हमला गरेको छ, जसमा तेल अवीव र हाइफाजस्ता सहरहरूमा ठूलो क्षति भएको छ । ईरानी सरकारी सञ्चारमाध्यमका अनुसार इजरायली आक्रमणमा हालसम्म २२४ जना मारिएका छन्, जसमा अधिकांश सर्वसाधारण छन् । इजरायलमा भने २४ जनाको मृत्यु भएको रिपोर्ट गरिएको छ । त्यस्तै यसबीच सोमबार एउटा अचम्मको घटना भएको छ – ईरानको एक समाचार च्यानलमा समाचार वाचन भइरहेका बेला इजरायली मिसाइल सिधै स्टुडियो वरिपरि खसेको देखिएको छ । एक भिडियोमा समाचार वाचकको आवाज काँपिएको सुन्न सकिन्छ, र स्टुडियोमा अफरातफरी मच्चिएको देखिन्छ । यो घटनाले युद्धमा नयाँ र नाटकीय मोड ल्याएको विश्लेषण भइरहेको छ ।

ट्रम्पको चर्को चेतावनी

सोमबार नै ट्रम्पले आफ्नै सामाजिक सञ्जाल ट्रुथ सोसलमा लेखे, “ईरानले मेरो प्रस्तावित सम्झौता स्वीकृत गर्नु पर्ने थियो । यो अत्यन्त लज्जास्पद र मानव जीवनको विनाश हो । ईरानले परमाणु हतियार पाउनु हुँदैन भन्ने मैले बारम्बार भनेको छु । सबैले तुरुन्तै तेहरान छोड्नुपर्छ !”

उनले आफू जी ७ समिट छाडेर वासिङ्टन फर्किएको र राष्ट्रिय सुरक्षा परिषद्को आपतकालीन बैठक बोलाएको पनि जनाएका छन् । ट्रम्पको यस अभिव्यक्तिपछि तेहरानको अवस्थामा परिवर्तन आउन थालेको छ । त्यहाँ मानिसहरू शहर छोडेर पलायन हुन थालेका छन् र मुख्य सडक राजमार्गहरूमा गाडीको लामो जाम देखिएका तस्विरहरु सामाजिक सञ्जालमा देखिन थालेको छ । पेट्रोलको अभाव र एटीएमहरू खाली हुन थालेको समाचार पनि सार्वजनिक भएको छ ।

चीनको आधिकारिक सन्देश

त्यस्तै ट्रम्पको चेतावनीपछि चीनले पनि इजरायलमा रहेका आफ्ना नागरिकलाई तुरुन्तै इजरायल छोठ्न आग्रह गर्दै वक्तव्य जारी गरेको छ । चिनियाँ दूतावासले सामाजिक सञ्जाल वीच्याटमा प्रकाशित सूचनामा लेखेको छ, “ईरान-इजरायल युद्ध गहिरिँदै गएको छ । नागरिक पूर्वाधारहरू ध्वस्त भइरहेका छन्, मृत्यु र घाइतेको सङ्ख्या बढ्दो छ र सुरक्षा अवस्था अत्यन्त संवेदनशील बन्दै गएको छ ।” दूतावासले आफ्ना नागरिकहरूलाई जोर्डनसँग जोडिएको स्थल सीमा प्रयोग गर्न आग्रह गरेको छ ।

पहिले ट्रम्प र अहिले चीनको यस्तो कडा अभिव्यक्तिले अन्तर्राष्ट्रिय समुदायमा चिन्ता बढाएको छ र यो युद्धमा अमेरिका तथा चीनको सीधा संलग्नताको आशंका पनि बलियो हुँदै गएको छ ।

# इरान–इजरायल तनावमा फसे ट्रम्पः युद्ध वा सम्झौता ?

इरान । इजरायल द्वन्द्व चर्किँदै जाँदा अमेरिकी पूर्वराष्ट्रपति डोनाल्ड ट्रम्पको भूमिका विवादमा परेको छ। कहिले इजरायलको पक्षमा बोल्ने त कहिले आफू त्यसबाट टाढा रहेको बताउने–ट्रम्पको यस्तो दोहोरो अभिव्यक्तिले अमेरिका र विश्वमा अन्योल थपेको छ।

यसबीच इजरायली प्रधानमन्त्री बेन्जामिन नेतान्याहुले अमेरिकासँग समन्वयमा हमला गरिएको दाबी गरेका छन्। यस्तो अवस्थामा ट्रम्पको रणनीति, प्रभाव र विकल्पबारे प्रश्न उठ्न थालेका छन्।

तेहरानमा इजरायली मिसाइल आक्रमणपछि ट्रम्पले इरानी नेताहरूलाई कठोर चेतावनी दिएका थिए। यद्यपि, ट्रम्प आफैंले विगतमा इरानसँग संवादमार्फत समाधान खोज्नुपर्ने धारणा राख्दै आएका थिए। आफूलाई 'सर्वोत्कृष्ट सम्झौताकार' मान्ने ट्रम्पका लागि सैन्य र कूटनीति बीचको द्वन्द्व स्पष्ट देखिन्छ।

उनको व्यवहार 'पागल व्यक्ति सिद्धान्त' अन्तर्गत व्याख्या गरिन्छ–जहाँ अनिश्चितता नै एक किसिमको रणनीति हो। यो सिद्धान्त शीतयुद्धकालमा अमेरिकी राष्ट्रपति निक्सनसँग जोडिएको थियो।

ट्रम्पका कट्टर समर्थक र सल्लाहकारले इरानमाथिको दबाबलाई सही ठान्छन्। उनीहरू विश्वास गर्छन्–धम्कीमार्फत इरान सम्झौतामा आउनेछ। तर, विडम्बना, ट्रम्पकै समयमा सुरु भएको ओमान वार्ता इजरायली आक्रमणसँगै रद्द भइसकेको छ।

हाल ट्रम्पले अमेरिकी संलग्नता नकार्ने प्रयास गरे पनि इजरायललाई अमेरिकी सैन्य सहयोग जारी छ। अमेरिकी नौसेनाका जहाज र मिसाइल प्रणाली इरानी आक्रमणबाट इजरायललाई जोगाउन सक्रिय छन्।

यसैबीच, ट्रम्पको राष्ट्रिय सुरक्षा टोलीले परिस्थिति अझ संवेदनशील बनाउने कदमबाट टाढा रहन सुझाव दिइरहेका छन्। यदि इरानी हमला इजरायली रक्षा प्रणाली छलेर गम्भीर क्षति पुऱ्याउँछ भने अमेरिका युद्धमा तानिने सम्भावना अझ बलियो हुनेछ।

मागा आन्दोलनको विरोध र ट्रम्पको सन्तुलन

ट्रम्पको “मेक अमेरिका ग्रेट अगेन” (मागा) आन्दोलनभित्रै पनि इजरायलप्रति परम्परागत समर्थनप्रति प्रश्न उठ्न थालेका छन्। कतिपय प्रभावशाली समर्थकहरू–जस्तै टकर कार्लसन र सांसद मार्जोरी टेलर ग्रिन–ले इजरायली युद्धमा अमेरिकाको संलग्नता 'अमेरिका फर्स्ट' नीतिको विरुद्ध भएको बताएका छन्।

यिनले ट्रम्पलाई इजरायलप्रति अन्धसमर्थन नजनाउन चेतावनी दिँदै युद्धमा अमेरिका नतान्न आग्रह गरेका छन्। ट्रम्पले पनि यस धारणा सुनेजस्तो देखिन्छ, किनभने उनले सामाजिक सञ्जालमार्फत युद्ध अन्त्यको पक्षमा र पुटिनसँग मिलेर समाधान खोज्नुपर्ने धारणा व्यक्त गरेका छन्।

तर इरानले चेतावनी दिइसकेको छ–यदि अमेरिका इजरायलको पक्षमा उभिरह्यो भने, यस क्षेत्रका अमेरिकी सैन्य अड्डाहरू हमलाको लक्ष्य बन्न सक्छन्।

ट्रम्प एकैचोटि नेतान्याहुको दबाब, रिपब्लिकन युद्ध समर्थक र मागा आन्दोलनको असहमतिको बिचमा उभिएका छन्। द्वन्द्वको दिशा जता गए पनि ट्रम्पका लागि यो अवस्था राजनीतिक रूपमा संवेदनशील र रणनीतिक रूपमा चुनौतीपूर्ण बनिरहेको छ।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### देशमा मौलाउँदै “असारे विकास”

नेपालमा हरेक वर्ष आ.व. शुरु हुनु साढे एक महिना अघि प्रतिनिधि सभा र राष्ट्रिय सभाको संयुक्त बैठकमा सरकारबाट बजेट प्रस्तुत गरिन्छ । त्यसपछिको १५ दिन बजेट माथि छलफल गरी संशोधनसहित वा सरकारले चाहेमा प्रस्तुत बजेट नै पारित गर्ने परम्परा रहेको छ । त्यस पछिको समय भनेको प्रदेश तथा स्थानीय सरकारले पनि असार भित्र बजेट पारित गर्नु पर्ने संबैधानिक व्यवस्था रहेको छ ।

तर हरेक वर्ष सरकारले प्रस्तुत गरेको बजेट खर्च नहुने गरेको परम्परा पनि रहेको छ, जसलाई प्रशासनिक कमजोरीको संकेत मान्ने चलन पुरानै हो । यही सोचका कारण बजेट सकिने समय झिकेर खर्च देखाउने अभ्यास व्यापक भएको छ । कागजमा योजनाको प्रगति मिलाएर रकमान्तरमार्फत रकम सक्याउने प्रवृत्तिले विकृत रूप लिँदै गएको छ । यसरी बजेट पास भएको एघार महिना पछि बल्ल बजेटमा व्यवस्था गरेको आयोजना शुरु हुने गर्दछ ।

यसरी खर्च देखाउने प्रवृत्ति स्थलगत अनुगमन न्यून हुने र केवल प्रतिवेदन बुझाएर योजना सम्पन्न ठानिने समयदेखि चलेको हो । जब योजना सकिएको देखाउँदा सम्बन्धित व्यक्तिहरूलाई आर्थिक लाभ समेत हुने सम्भावना रहन्छ, तब यस्तो अभ्यास किन रोकियोस ? सुरुमा साना योजना र न्यून बजेटमा यस्ता अभ्यासले ठूलो आर्थिक क्षति पुऱ्याउँदैनथ्यो । तर, समयक्रममा योजनाको आकार र रकम दुवै बढ्दै गएपछि कागजी प्रगति देखाएर रकम हिनामिना गर्ने प्रवृत्तिले गम्भीर अनियमितता निम्त्याउन थाल्यो ।

नेपालमा आर्थिक वर्षको अन्तिम महिना असारमा बजेट खर्च गर्ने गति अत्यधिक हुन्छ । प्रक्रियागत रूपमा पनि अन्तिम भुक्तानी यही समयमा हुने भएकाले खर्च बढ्नु सामान्य हो । तर, असारको अन्तिम साता एकाएक ह्वात्तै बढ्ने खर्च भने अस्वाभाविक र चिन्ताजनक हो । ‘असारे विकास’ले प्रशासनिक संयन्त्रमा व्यापक भ्रष्टाचार भित्र्याएको छ । काम सम्पन्न नभई रकम भुक्तानी गर्नु, योजना नपुगेको भए पनि खर्च देखाउनु–यी सबै अभ्यासले आर्थिक अनुशासनमा गम्भीर आघात पुर्याइरहेका छन् ।

विशेष संकटको समयबाहेक सामान्य अवस्थामा पनि यस्तो प्रवृत्ति झन् बढ्दै जानु नेपालको कमजोर अर्थतन्त्रका लागि खतरा हो । भ्रष्टाचारको जरा उखेल्न आर्थिक अनुशासन कायम गर्नु अब अत्यावश्यक भइसकेको छ ।

‘असारे विकास’ जस्ता खर्चका विकृत अभ्यासहरू रोक्न सरकार दृढ हुनुपर्छ । अर्थ मन्त्रालयले रकमान्तरमा नियन्त्रण ल्याउने, योजनाको वास्तविक प्रगतिलाई प्राथमिकता दिने, र असारको अन्तिम समयमा चेक काट्ने प्रचलन बन्द गर्ने हो भने आर्थिक बेथिति न्यूनीकरण गर्न सकिन्छ ।

योजना कार्यान्वयनमा संलग्न कर्मचारीका लागि यो अभ्यास ‘कमाईको स्रोत’ र नेताहरूका लागि ‘राजनीतिक प्रभाव’ देखाउने माध्यम बनिसकेको छ । यस्तो अवस्था जारी रहँदा अर्थतन्त्र गम्भीर संकटमा फस्ने खतरा छ । सुधारका ढोका अझै पूर्णरूपमा बन्द भइसकेका छैनन– तर अब ढिलो गर्न मिल्दैन ।

# मामाचेली वा फुपूचेलीसँग बिहेबारीका असर

● अर्जुनध्वज अर्याल

मानव समाजको सुरुवाती चरणमा विवाहको औपचारिकता थिएन, तर जोडी बन्ने प्रवृत्ति (एबष्च द्ययलमष्लन) प्राकृतिक रूपमा अस्तित्वमा थियो । विवाह मानव समाजको आधारभूत संस्था हो, जसले दुई व्यक्ति र दुई परिवारलाई जोड्छ। यो केवल यौन प्यास मेटाउने वैधानिक र औपचारिक बाटो मात्रै नभएर वंश धान्ने र आफ्नो अस्तित्वको निरन्तरता दिने माध्यम पनि हो।

कौटिल्यको अर्थशास्त्रले विवाहलाई सामाजिक अनुशासन, धर्म, र राज्यको नियन्त्रणसँग जोडेको छ भने मनुस्मृतिले धार्मिक संस्कार र सामाजिक कर्तव्यका रुपमा। त्यसैगरी प्राचीन दार्शनिक प्लेटोले रिपब्लिकमा विवाहलाई सामाजिक दायित्व मान्दै राज्यको हितका लागि नियन्त्रित हुनुपर्ने कुरा लेखेका छन्। उनको विचारमा, उत्कृष्ट नागरिक उत्पन्न गर्नका लागि शारीरिक र बौद्धिक रुपमा योग्य पुरुष र महिलाहरु बीचमा मात्र सम्बन्ध हुनुपर्छ। शारीरिक रुपमा कमजोरहरुका लागि विवाह वर्जित हुनुपर्छ।

कौटिल्यको मत भने अलि फरक देखिन्छ । वंश धान्नका लागि पुत्रको रहर गर्ने स्त्रीले कुष्ठरोगी वा पागल पुरुषसँग पनि संसर्ग गर्न पाउँछन्। यसको अर्थ, जसरी पनि वंश धान्नै पर्छ।

हाम्रा पिता पुर्खाहरु प्लेटोको विवाह बारेमा नपढे पनि उनको विचारसँग सहमत रहेको देखिन्छ। त्यसैले हाम्रो समाजमा कसरी असल वंश निर्माण गर्न सकिन्छ भनेर रोजी-रोजी र खोजी-खोजी विवाह गर्ने/गराउने चलन थियो र छ । प्राचीन कालमा विवाह परिवार र राज्यको नियन्त्रणमा थियो भने आज यो व्यक्तिको पनि व्यक्तिगत स्वतन्त्रताको विषय बनेको छ।

विवाह केवल प्रेम वा सामाजिक सम्झौतामात्र होइन, एउटा सांस्कृतिक, धार्मिक, र कानूनी प्रक्रिया पनि हो। विवाह सम्बन्धी पहिलो लिखित कानूनका रुपमा बेबिलोनियन कोड अफ हम्मुराबो (१७५० ई .पू .) लाई लिइन्छ। विवाहको स्वरूप जात, धर्म, र क्षेत्रअनुसार फरक हुन्छ। २१औं शताब्दीमा विवाहलाई अध्ययनको विषय बनाइनु कति सान्दर्भिक हुन्छ, थाहा छैन । किनकि यो व्यक्तिको निजत्वको मामला हो। निजत्वमाथि राज्यले त हस्तक्षेप गर्न सक्दैन भने आम सर्वसाधारणको त के कुरा भयो र।

कुरै कुरामा एक दिन एउटा साथीले भन्यो - हेर न सगोत्रीमा समेत विवाह नगर्ने हाम्रो समाजमा मेरो परिवारको एउटा विवाहको कुराले तनाव दिइरहेको छ।

उसले थप्यो- केटा र केटी नाताले दाजुबहिनी पर्दछन् तर दुबैजना विदेशमा साझेदारी बसाइमा रहेका छन्। दुबैको



कमाइ राम्रै छ । दुबैले एक अर्कालाई छोड्न नसक्ने कुरा गर्छन्। यही आएर विवाह गर्छौं मात्रै होइन, विवाह पारिवारिक हुनैपर्छ भन्दै नाइनास्ती गर्छन्। उनीहरुलाई यस्तो विवाह गर्न हुँदैन तर तिमीहरु नगरी नछोड्ने हो भने उतै गर न भनेर धेरैजनाले धेरै पटक सम्झाउँदा पनि मान्दैनन्। अब गर्ने के ?

साथीको भनाइमा म नाजवाफ भएँ। मसँग यसको कुनै उत्तर नै थिएन र छैन पनि। तर, यस घटनाले मलाई झक्झकायो। के नेपालमा मात्रै वा हिन्दु धर्ममा मात्रै रगतको नाता सम्बन्धमा विवाह गर्न रोकेको हो त भनेर घोत्लिएँ। अनि यसो केही अध्ययन गर्दै गर्दा यस्ता केही रोचक कुराहरु फेला परे, जसलाई यहाँ पस्किने प्रयास गरेको छु।

के हो रगतको नाताको विवाह ?

रगतको नाताको विवाह भनेको आफ्नै रक्त सम्बन्धी अर्थात जैविक रूपमा नजिकको भाइबहिनी, कजिन, फुपू/मामाका सन्तान, आदिसँग गरिने विवाह हो। यसलाई अंग्रेजीमा ऋयलकबलनगष्लभयगक :बचचष्बनभ भनिन्छ। रगतको नाताको विवाहलाई प्रत्यक्ष रक्त सम्बन्धी विवाह अन्तर्गत भाइ-बहिनी विवाह र मामा-भान्जा/फुपू-भतिजा विवाह भनिन्छ।

प्राचीन मिस्रमा फेरो राजाहरूले आफ्नै बहिनीसँग विवाह गर्ने चलन थियो भनिन्छ। प्राचीन कालमा भाइ-बहिनी विवाह भए पनि अहिले भने सबै देशमा कानूनी रुपमा प्रतिबन्धित छ। धेरै देशहरुले कानूनी रुपमा बन्देज लगाए पनि मामा-भान्जा/फुपू-भतिजा विवाह भारतका तमिलनाडु र आन्ध्र प्रदेशमा अहिले पनि छ।

कुरा रह्यो अर्को ‘कजिन विवाह’ को। यो कजिन विवाह पनि फर्स्ट कजिन विवाह र सेकेन्ड कजिन विवाह गरेर दुई समूहमा बाँडेको पाइन्छ। पहिलो विवाहमा मामाचेली र फुपूचेलीबीच बिहेबारी हुन्छ भने देस्रोमा दाजुभाइका नाति-नातिनी बीचमा विवाह हुन्छ। यी दुई विवाह धेरै देशहरुमा कानूनी रुपमा वैध नै मानिन्छन्।

एउटै वंश, परिवार, वा साझा पूर्वज भएका, रगतको नातामा पर्ने दुई व्यक्तिहरूबीचको विवाह अयलकबलनगष्लभयगक ूबचचष्बनभ हो। यसलाई हाडनाता वा रगतको नातामा विवाह पनि भनिन्छ। वैज्ञानिक दृष्टिले यस प्रकारको विवाहले स्वास्थ्य तथा सामाजिक समस्याहरू ल्याउन सक्छ भन्ने गरिन्छ।

नेपालमा, हिन्दू धर्म र कानुन अनुसार, सात पुस्ताभित्रका रगतको नाताबीच विवाह गर्न प्रतिबन्ध छ। तर, त्यही धर्म अन्तर्गतका हिन्दु पुराण र कथाहरुमा रगतको नाताभित्र विवाह गरेका प्रसंगहरु पनि भेटिन्छन्। महाभारतका चर्चित पात्र अर्जुनले आफ्ना मामा बासुदेवकी छोरी तथा कृष्णकी बहिनी शुभद्रासँग विवाह गरेका थिए भने सिद्धार्थ गौतमले कोलीय वंशका राजा सुप्वबुद्ध/शुप शुद्ध अर्थात आफ्नै मामाकी छोरी तथा देवदत्तकी बहिनी यशोधरासँग गरेका थिए।

हुन त पुराण र वास्तविक जीवनबीच त्यतिधेरै तालमेल नहुन पनि सक्छ र खोज्नु सान्दर्भिक पनि हुँदैन। नेपालमा क-कसले यस्तो विवाह गर्छन् त ?

आधुनिक कालमा ठूला घरनाका वा दरवारिया भनेर मानिने र चिनिने शाह र राणा परिवारमा मामाचेली र फुपूचेलीबीचको विवाह भएको देखिन्छ। यसको शुरुवात श्री ३ महाराज जङ्गबहादुर र श्री ५ महाराज सुरेन्द्रका पालादेखि भएको देखिन्छ।

नेपालको राजनीतिक इतिहासमा यसलाई राजनीतिक विवाह पनि भन्ने गरिन्छ। यसप्रकारको विवाहले दुई परिवारबीच राजनीतिक सम्बन्धको गाँठो बलियो गरी कसेकैले होला, १०४ वर्षसम्म राणाजीहरुले श्री ३ को पगरी र पदवीसहित गजधम्म परेर बस्न पाए। २०५८ साल जेठ १९ को कहालीलाग्दो घटना पनि यही प्रकारको विवाह काण्डले भएको पनि भन्ने गरिन्छ।

यो परम्परा विशेषगरी राणाकाल (१८४६-१९५१ ) व्यवस्थितरुपमा भएको देखिन्छ। तर यही कुरा अन्य हिन्दु धर्म मान्नेहरुका लागि भने वर्जित थियो। उनीहरुको भातभान्सा रोकिन्थ्यो भने जात पनि तहगत शासकहरुबाट च्यूत गरिन्थ्यो । त्यसैले भनिएको त होला नि, सानालाई ऐन अनि ठूलालाई चैन ।

यसप्रकारको विवाह क्षेत्री, नेवार, मधेशी, र केही जनजातीय समुदायमा अहिले पनि पाइन्छ। यसप्रकारको विवाहको पक्षमा वकालत गर्नेहरु भन्दछन् कि यसले पैतृक सम्पत्तिको सुरक्षा हुन्छ, सामाजिक-आर्थिक स्थिरता कायम हुन्छ, र सास्कृतिक मूल्य र मान्यताको जगेर्ना हुन्छ।

पछिल्लो समयमा यसखाले विवाह क्रमशः घटदो क्रममा रहेको देखिन्छ। तथापि विश्व बजारमा यसका अवशेषहरु अझै पनि पाइन्छन्। गुरुङ, मगर, थारु, राई, लिम्बु, र नेवार लगायतका जनजातिहरुमा बढी प्रचलित यसखालको विवाह केवल नेपालमा मात्रै सीमित छैन। नेपालको तुलनामा भारत, पाकिस्तान, र अरब देशहरुमा यो प्रथा अझ व्यापक मात्रामा रहेको छ।

पाकिस्तानका विभिन्न समुदायमा वट्टा-सट्टा भनिने यो विवाह प्रचलनमा छ। जस्तैः पञ्जाव प्रान्तमा एक परिवारले आफ्नो छोरी अर्को परिवारको छोरालाई दिन्छन र उसको छोरी लिन्छन् । भारतका तमिल ब्राह्मणहरूमा मामाकी छोरीसँग विवाह गर्नलाई उत्तम ठान्दछन्। मामाचेली/फुपूचेली विवाह दक्षिण एसिया, मध्य पूर्व, र अफ्रिकामा सांस्कृतिक र धार्मिक रूपमा स्वीकार्य छ।

ऐतिहासिक रूपमा जापानमा फूपुचेली विवाह प्रचलित थियो, तर अहिले कानूनी रूपमा मन्जुर छ। कानूनले प्रतिबन्ध लगाए पनि चीनका ग्रामीण वस्तीहरुमा मामाचेली विवाहको चलन अहिले पनि पाइन्छ।

पश्चिमा विकसित देशहरु भनेर चिनिने युरोप, अमेरिका, र अस्ट्रेलिया जस्ता देशहरुमा पनि यस प्रकारको विवाह प्रचलनमा रहेको पाइन्छ। युरोपका जर्मनी, फ्रान्स, र स्पेन जस्ता मुलुकमा कस-कजिन विवाह गैरकानूनी छैन । तर, सामाजिक रूपमा अस्वीकार्य बन्दै गैरहेको छ। बदलिँदो विश्व परिवेश र भूमण्डलीकरणका कारणले पनि यसप्रकारका विवाहमा विस्तारै अस्वीकार्यता बढदै गएको पाइन्छ।

अमेरिकाका ३१ वटा राज्यहरुमा फर्स्ट-कजिन विवाहमा प्रतिबन्ध नै लगाएको पाइन्छ बाँकी १९ वटा राज्यमा केही शर्तहरु जस्तै डाक्टरको स्वीकृति वा न्यायिक आदेश आदिका आाधारमा विवाहको अनुमति दिने गरेको छ।

मुख्य राज्यमा जेनेटिक काउन्सिलिङ गरेर मात्र विवाह गर्न अनुमति दिइन्छ भने एरिजोनामा ५० वर्षभन्दा माथिका मानिसले मात्रै यसप्रकारको विवाह अनुमति पाउँछन्। ४५ वर्ष माथि वा बाँझोपन प्रमाणित गरेमा इलिनोइस राज्यमा यस्तो विवाहका लागि अनुमति पाउँछन्।

यसखालको विवाहमा फ्लोरिडाले २०२३ मा कानूनी रुपमा प्रतिबन्ध लगाउने प्रस्ताव गरे पनि हालसम्म कानूनी रुपमा वैध नै मानिन्छ। उता अस्ट्रेलियाका धेरैजसो राज्यहरुमा क्रस-कजिन विवाह कानूनत वैध मानिन्छ ।

क्रमशः

# नेपाल मेडिसिटीमा पहिलोपटक सफल कलेजो प्रत्यारोपण सम्पन्न



काठमाडौं । नेपाल मेडिसिटी अस्पतालले आफ्नो चिकित्सा सेवामा ऐतिहासिक सफलता हासिल गर्दै पहिलोपटक सफल कलेजो प्रत्यारोपण गरेको छ । ५६ वर्षीय पोखराबासी ईश्वरबहादुर कार्कीको कलेजो उनका २६ वर्षीय छोरा आयुष कार्कीले दान गरेका थिए । जेठ ८ गते सम्पन्न उक्त शल्यक्रिया नेपालकै चिकित्सा इतिहासमा एक महत्वपूर्ण उपलब्धि मानिएको छ ।कलेजो प्रत्यारोपण चिकित्सा विज्ञानमा अत्यन्तै जटिल प्रक्रिया मानिन्छ जसमा अनुभवी र बहु-विषयगत टोलीको समन्वय आवश्यक पर्छ । दाताको शल्यक्रियामा ९ घण्टा र प्राप्तकर्ताको शल्यक्रियामा १३ घण्टा लागेको थियो । भारतको अमृता अस्पतालसँग सहकार्य गर्दै मेडिसिटीको चिकित्सक टोलीले यो जटिल प्रक्रिया सफलतापूर्वक सम्पन्न गरेको हो ।

आयुष कार्कीका अनुसार, "हामी उपचारको खोजीमा दुईपटक भारत गएका थियौं तर सन्तोषजनक सल्लाह नपाएपछि नेपालमै सम्भव भएको जानकारी पायौं । मेडिसिटीको सेवा र सुविधाले हामीलाई विश्वास दिलायो ।" उनले उपचार नेपालमै गराउँदा समय र खर्च दुवै बचत भएको उल्लेख गरे ।

मेडिसिटी अस्पतालका अध्यक्ष डा. उपेन्द्र महत्तोले यो सफलतामा अस्पतालको दक्ष बहु-विषयगत चिकित्सक टोलीको योगदान रहेको बताए । उनले भने, "हाम्रो लक्ष्य नेपाली नागरिकलाई आफ्नै देशमा विश्वस्तरीय स्वास्थ्य सेवा उपलब्ध गराउनु हो ।

ग्यास्ट्रोइन्टेरोलोजी विभागका प्रमुख डा. उमिद कुमार श्रेष्ठका अनुसार, बिरामी ईश्वरबहादुरको कलेजो र मिर्गौला दुवै गम्भीर रुपमा प्रभावित थिए । उनलाई पेटमा पानी जम्ने, होस गुम्ने, र रगत वान्ता हुनेजस्ता लक्षण देखिएका थिए । त्यस्ता जोखिमका बीच सफल प्रत्यारोपण गर्नु चिकित्सकीय दृष्टिकोणले उल्लेखनीय सफलता हो ।

कलेजो प्रत्यारोपण सर्जन डा. रामबाबु साहले भने, "हामीले बिरामी र परिवारलाई सम्भावित जोखिमहरूबारे स्पष्ट जानकारी दिएका थियौं । मिर्गौला समस्यालाई पछि सम्बोधन गर्ने योजना बनाएका थियौं र कलेजो प्रत्यारोपणपछित्यसमा उल्लेखनीय सुधार देखिएको छ ।"

नेपालमा वार्षिक करिब २००-३०० जनालाई कलेजो प्रत्यारोपण आवश्यक पर्ने देखिन्छ । तर, एम्बेसी अफ नेपाल, दिल्लीका अनुसार, सन् २०२३-२४ मा मात्रै ७० भन्दा बढी नेपालीले भारतमा कलेजो प्रत्यारोपण गराएका छन् । मेडिसिटीको सफल प्रयासले यस प्रवृत्तिमा परिवर्तन ल्याउने अपेक्षा गरिएको छ । यसअघि मेडिसिटी अस्पतालले ४५ भन्दा बढी मिर्गौला प्रत्यारोपण र ५०० भन्दा बढी हिप तथा जोर्नी प्रतिस्थापन सफलतापूर्वक सम्पन्न गरिसकेको छ । अब सफल कलेजो प्रत्यारोपणको थालनीले अस्पतालको अन्तर ाष्ट्रियस्तरको सेवा विस्तारमा नयाँ आयाम थपेको छ ।

# छोटा भिडियो सम्पादनका लागि मेटाको एडिट्स एप




एजेन्सी । मेटाले हालै सामग्री निर्माता (क्रिएटर) हरूका लागि नयाँ भिडियो सम्पादन एप 'एडिट्स' सार्वजनिक गरेको छ । यो नयाँ एप लोकप्रिय छोटो भिडियो सम्पादन एप क्यापकटसँग प्रतिस्पर्धा गर्न डिजाइन गरिएको हो, जुन बाइटडान्स अन्तर्गतको कम्पनीले बनाएको हो र धेरै क्रिएटरहरूले प्रयोग गर्दै आएका छन् ।

टिकटकमाथि प्रतिबन्ध लगाउने प्रयासका क्रममा क्यापकट केही समयका लागि अमेरिकी एप स्टोरबाट हटाइएको समय मेटाले यसै वर्षको जनवरीमा एडिट्समा काम गरिरहेको जानकारी पहिलो पटक दिएको थियो ।

अहिले क्यापकट पुनः उपलब्ध भए पनि टिकटकको भविष्य अमेरिका भित्र अझै अन्योलमा छ, त्यसैले क्यापकटको विकल्पमा मेटाले आफ्नो नयाँ एडिट्स एपमार्फत फाइदा उठाउने तयारी गरेको टेकक्रञ्चले उल्लेख गरेको छ ।

यो एपमा उपलब्ध सुविधाहरूबारेको मार्गनिर्देश तथा क्यापकटसँगको तुलना यस्तो छः

एडिट्स एप आईओएस र एण्ड्रोइड दुवै प्लेटफर्ममा उपलब्ध छ । एप डाउनलोड गरी खोल्नेबित्तिकै प्रयोगकर्तालाई आफ्नो इन्स्टाग्राम खाताबाट लगइन गर्न भनिन्छ ।

त्यसपछि प्रयोगकर्ताले पाँचवटा मुख्य ट्याब देख्नेछन : आइडियाज, इन्स्पिरेशन, प्रोजक्ट्स, रेकर्ड, र इन्साइट्स । आइडियाज ट्याबमा प्रयोगकर्ताले नयाँ भिडियोका लागि विचार लेख्न र रुचिकर रील्स सुरक्षित गर्न सक्छन् । इन्स्पिरेशन ट्याबमा ट्रेन्डिङ अडियो र लोकप्रिय रील्स खोज्न सकिने सुविधा दिइएको छ ।

टेकक्रञ्चका अनुसार प्रोजक्ट्स ट्याबमा प्रयोगकर्ताले आफूले हालै सुरु गरेका भिडियोहरू सुरक्षित राख्न सक्छन् र फोनको ग्यालरीबाट भिडियो अपलोड गर्न पनि सक्छन् ।

रेकर्ड ट्याबमार्फत एपमै भिडियो खिच्न सकिन्छ । अन्त्यमा इन्साइट्स ट्याबमा प्रयोगकर्ताले कति पटक हेरियो, कति दर्शकसम्म पुग्यो, कति फलोअर्स थपिए आदि जानकारी पाउन सक्छन् ।

एडिट्स एपमा उपलब्ध केही विशेष फिचरहरू :

- ग्रीन स्क्रीनः एक ट्यापमै भिडियोको पृष्ठभूमि परिवर्तन र सम्पादन गर्ने सुविधा
- टाइमलाइनः भिडियोक्लिपहरू मिलाउने र सम्पादन गर्ने
- क्याप्शन्सः विभिन्न भाषामा स्वतः क्याप्सन थप्ने
- अडियो लाइब्रेरीः इन्स्टाग्रामको सङ्गीत लाइब्रेरीबाट गीत प्रयोग गर्ने
- कटआउट्सः सामाग्रीहरू छुट्याएर ट्र्याक गर्ने
- एनिमेटः स्थिर तस्बिरलाई भिडियोमा रूपान्तरण गर्ने
- अप्लाइ अलः एकैपटक सबै क्लिपमा फिल्टर, इफेक्ट, ट्रान्जिसन आदि एप्लाई गर्न सकिने
- टाइमलाइन फ्रेम रेट सेलेक्टरः फ्रेमरेट परिवर्तन गरेर भिडियोलाई अझ राम्रो बनाउने
- अलाइनमेन्ट गाइड्सः भिडियो पोस्ट गर्दा मुख्य भागहरू ठीकसँग देखिने गरी स्थान मिलाउने
- बीट मार्कस : अडियोसँग मेल खाने गरी टेक्स्ट वा क्लिपहरू सजिलै मिलाउने
- फिल्टर्सः ३० वटा फरक फिल्टर विकल्पहरू
- ट्रान्जिशन्सः ३० वटा ट्रान्जिसन विकल्पहरू क्लिपहरू जोड्न सकिने

एडिट्स र क्यापकटबीच भएका फरक :

दुवै एप छोटो भिडियो सम्पादनका लागि राम्रो विकल्प भए पनि क्यापकटले एडिट्स भन्दा धेरै परिष्कृत सम्पादन उपकरण र एआई फिचरहरू प्रदान गर्छ ।

यो स्वाभाविक पनि हो, किनभने एडिट्स क्यापकट भन्दा नयाँ एप हो । मेटाले भविष्यमा एडिट्समा थप सुविधाहरू थप्ने अपेक्षा गरिएको छ । साथै क्यापकटसँग एडिट्स भन्दा ठुलो सङ्गीत संग्रह पनि छ ।

अर्को फरक कुरा के छ भने अहिले एडिट्स पूर्ण रूपमा निःशुल्क छ, तर क्यापकट सीमित रुपमा निःशुल्क छ र अन्य सुविधाका लागि शुल्क तिरेर मात्र प्रदान गर्न सकिन्छ ।

इन्स्टाग्रामका प्रमुख एडम मोसेरीका अनुसार, भविष्यमा एडिट्समा पनि सशुल्क प्रो सुविधाहरू थपिने सम्भावना छ । त्यसैगरी क्यापकट वेबमा पनि उपलब्ध छ, तर एडिट्स हाल मोबाइल एप मात्र उपलब्ध छ ।

# खाली पेटमा यी ५ फलफूल खानाले एसिडिटीका कारण पेट खराब

एजेन्सी । फलफूल प्राकृतिक पोषक तत्वहरूको भण्डार हो । त्यसैले स्वस्थ रहन दैनिक फलफूल खान सल्लाह दिइन्छ । फलफूल हाम्रो आहारको एक महत्त्वपूर्ण भाग हो र यसमा पाइने भिटामिन, खनिज र फाइबरले शरीरलाई विभिन्न प्रकारका पोषण प्रदान गर्दछ । प्रायः मानिसहरू स्वस्थ रहन बिहान उठ्ने बित्तिकै खाली पेटमा फलफूल खान्छन्, तर त्यसो गर्नु सधैं फाइदाजनक हुँदैन । केही फलफूल यस्ता छन् जुन खाली पेटमा खाएमा पेटमा एसिड बन्ने गर्छ, जसले गर्दा ग्यास, अपच, जलन र पेट दुख्ने समस्या हुन सक्छ । यहाँ खाली पेटमा खान नहुने ५ वटा फलफूलको बारेमा केही चर्चा गरौं ।

केरा - केरा फाइबर, पोटासियम र ऊर्जाको राम्रो स्रोत हो, तर यसलाई खाली पेटमा खानु ठीक मानिँदैन । केरा खाँदा शरीरमा म्याग्नेसियमको मात्रा बढ्न सक्छ, जसले मुटुको कार्यप्रणालीलाई असर गर्न सक्छ । केरा एक भारी फल हो, जसले गर्दा धेरै मानिसहरूलाई ग्यास, पेट फुल्ने र आलस्य महसुस हुन्छ । यदि तपाईं यसलाई ब्रेकफास्टमा खान चाहनुहुन्छ भने, यसलाई दलिया, रोटी वा केही ठोस चीजसँग खानुहोस् ।

सुन्तला - सुन्तलामा भिटामिन सी र एन्टिअक्सिडेन्ट प्रशस्त मात्रामा पाइन्छ, जुन रोग प्रतिरोधात्मक क्षमताको लागि राम्रो हुन्छ । तर यसमा रहेको साइट्रिक एसिड खाली पेटमा खाँदा हानिकारक हुन सक्छ । बिहान खाली पेटमा सुन्तला खाँदा एसिडिटी, छाती पोल्ने र पेट दुख्ने समस्या हुन सक्छ । ग्यास्ट्रिकको समस्या भएका व्यक्तिहरूले यसलाई बेवास्ता गर्नुपर्छ ।

अम्बा - अम्बा स्वादमा गुलियो र पौष्टिक हुन्छ । यो कब्जियत कम गर्न र प्रतिरक्षा प्रणाली बलियो बनाउन उपयोगी छ । यद्यपि, अम्बामा फाइबर धेरै मात्रामा हुन्छ, जसले गर्दा खाली पेटमा सेवन गर्दा ग्यास र पेट फुल्ने समस्या हुन सक्छ । केही मानिसहरूलाई पेट दुख्ने, पखाला लाग्ने वा बेचैनी हुने समस्या पनि हुन सक्छ । दिउँसो वा बेलुका अम्बा खानु राम्रो हुन्छ ।

गोलभेडा - गोलभेडा प्राविधिक रूपमा एक फल हो र यसमा ट्यानिक एसिड पाइन्छ । यो एसिडले पेटको भित्री अस्तरलाई क्षति पुऱ्याउन सक्छ, विशेष गरी जब पेट खाली हुन्छ । खाली पेटमा गोलभेडा खाँदा एसिड रिफ्लक्स, पेट दुख्ने र अल्सर हुन सक्छ । त्यसैले, सलाद वा खानासँग गोलभेडा खानुहोस्, तर बिहान खाली पेटमा नखानुहोस् ।

सिट्रस फलफूल - सिट्रस फलफूलमा साइट्रिक एसिडको मात्रा धेरै हुन्छ । खाली पेटमा यसको सेवनले पेटमा गम्भीर जलन, एसिडिटी र बान्ता हुन सक्छ । विशेष गरी पेटको समस्याबाट पीडित व्यक्तिहरूले खाली पेटमा यी फलफूलहरूबाट टाढा रहनु पर्छ । यी फलफूलहरू बिहानको खाजा वा दिउँसो खाएमा बढी सुरक्षित हुन्छन् । जबकि मेवा, तरबूज वा स्याउ हल्का फलफूल हुन्, जुन पचाउन सजिलो हुन्छ र खाली पेटमा पनि फाइदाजनक हुन्छ ।

# मोमोजले पायल्सदेखि आन्द्रासम्मका रोगहरू निम्त्याउन सक्छ

एजेन्सी । हरेक गल्ली, कुनामा मोमोको पसलहरु प्रशस्त मात्रामा खुलेका हुन्छन् । जहाँ स्वाद मानी मानी मानिसहरु मोमो खान रुचाउँछन् । केही बालबालिकाहरू यसमा अभ्यस्त भइसकेका छन्, युवाहरू पनि यसमा धेरै पछाडि छैनन् । तर यदि तपाईंलाई मोमोज खाने शौक छ भने यसले तपाईंलाई कुनै दिन अस्पताल पुऱ्याउन सक्छ । यदि तपाईंले उसलाई अस्पताल लैजानुभएन भने पनि, यसले पायल्स निम्त्याउन सक्छ । यति मात्र होइन, मोमोज पेटको लागि धेरै हानिकारक हुन्छ । यसले कलेजोमा पनि खतरनाक प्रभाव पार्छ । मोमोज खाने बानीले तौल पनि बढाउन सक्छ । यो मधुमेहका बिरामीहरूका लागि धेरै हानिकारक छ । गत वर्ष, अखिल भारतीय आयुर्विज्ञान संस्थानले मोमोज खानु अघि सय पटक सोच्न चेतावनी दिएको थियो । वास्तवमा, मोमोज खाँदा एक व्यक्तिको घाँटीमा अड्कियो जसका कारण उनको शल्यक्रिया गर्नुपऱ्यो ।

रगतमा चिनीको मात्रा छिटो बढ्नेछ

क्लिनिकल डाइटिसियन डा. प्रियंका रोहतगीले नियमित रूपमा मोमोज सेवन गरेमा धेरै साइड इफेक्ट हुने बताइन् । उनले भने कि मोमोमा प्रयोग हुने पीठोलाई अझ चिल्लो र लोचदार बनाउन ब्लीच गरिन्छ । यसका लागि बेन्जोयल पेरोक्साइड जस्ता हानिकारक रसायनहरू प्रयोग गरिन्छ । यो रसायनले सिधै प्यान्क्रियाजमा आक्रमण गर्छ । यसका कारण, प्यान्क्रियाजबाट निस्कने इन्सुलिन कम उत्पादन हुन थाल्छ । यसको अर्थ रगतमा चिनीको मात्रा बढ्नेछ । अर्थात् यो मधुमेहका बिरामीहरूका लागि धेरै हानिकारक छ ।

पायल्सको जोखिम धेरै गुणा बढी हुन्छ

डा. प्रियंका रोहतगीले पीठोबाट बनेको मोमोलाई बाफमा तताइने बताइन् । त्यसैले, यसमा थोरै पनि फाइबर हुँदैन । यो अल्ट्रा प्रशोधित हुन्छ । त्यसैले यसले आन्द्राको अस्तरको श्लेष्मलाई क्षति पुऱ्याउन थाल्छ । यसले कब्जियत निम्त्याउँछ । कब्जियतको कारण दिसा कडा हुन थाल्छ । यदि तपाईंले मोमोजसँग मसालेदार खुर्सानीको चटनी खानुहुन्छ भने, यो मिश्रणले पायल्स वा बवासीरको जोखिम बढाउँछ जसमा गुदाको कमजोर नसाहरू फुट्न थाल्छन् र यसले पायल्सको जोखिम धेरै गुणा बढाउँछ ।

मोमो किन खतरनाक हुन्छ ?

मोमोहरू पीठोबाट बनाइन्छ । परिष्कृत पीठो आफैं प्रशोधन गरिन्छ । यो आन्द्रामा जान्छ र त्यसमा टाँसिन्छ । परिष्कृत पीठोले सम्पूर्ण शरीरमा सूजन निम्त्याउँछ । यसको अर्थ यसमा फाइबर नै हुँदैन । यसलाई एजोडीकार्बोनामाइड, क्लोरीन ग्यास, बेन्जोयल पेरोक्साइड वा अन्य ब्लीचिङ रसायनहरूले सेतो बनाइन्छ । परिष्कृत पीठोमा एलोक्सनका अंशहरू पनि पाइन्छन्, जसले गर्दा परिष्कृत पीठोको बनावट नरम र क्रिस्पी हुन्छ । मोमोज पीठोबाट बनाइन्छ र यसमा अन्य धेरै चीजहरू पनि थपिन्छन् । यी सबै कुराले शरीरलाई धेरै हानि पुऱ्याउँछ । पीठोमा थपिएको ब्लीचिङ रसायनले प्यान्क्रियाजलाई हानि पुऱ्याउँछ । यसले शरीरमा इन्सुलिन उत्पादनमा समस्या निम्त्याउँछ । मोमोमा प्रयोग हुने तरकारी र कुखुरा प्रायः बिग्रिएका वा पुराना हुन्छन् । वास्तवमा धेरैजसो कुखुराका उत्पादनहरू अस्वस्थकर र सस्तो ठाउँहरूमा उपलब्ध छन् । यसमा ई. कोलाई ब्याक्टेरिया पाइन्छ । यसले पेटमा विष बनाउँछ जसले धेरै प्रकारका रोगहरू निम्त्याउँछ ।




# पढाइसगैं कमाइको अभ्यास: हिमाल कलेजले विद्यालयस्तरमै सुरु गऱ्यो व्यवहारिक कृषि र व्यवसायिक तालिम



पढाइसँगै कमाइको अभ्यास: हिमाल कलेजले विद्यालयस्तरमै सुरु गऱ्यो व्यवहारिक कृषि र व्यवसायिक तालिम

पोखरा । "पढौं, सिकौं र कमाऔं" भन्ने मूल नार ासहित हिमाल कलेज अफ म्यानेजमेन्ट तथा डाइनामिक एकेडेमीले यस वर्षदेखि विद्यालय तहमै व्यवहारिक कृषि र साना व्यवसाय सम्बन्धी अभियान सुरु गरेको छ। उद्देश्य- विद्यार्थीहरूलाई केवल किताबी ज्ञानमा सीमित नराखी व्यावसायिक सोच, सीप र आत्मनिर्भरतासम्म पुऱ्याउनु।

यो अभियान कक्षा ११ देखि लागू गरिएको छ, जसअनुसार विद्यार्थीहरूले आफ्नो लगानीमा आधारित साना कृषि तथा व्यवसायिक प्रोजेक्टहरू सञ्चालन गर्दै आएका छन्। बास्मती धान खेती, औषधीय वनस्पति उत्पादन, अर्गानिक मल निर्माण, बिरुवा संरक्षण तथा फलफूल व्यवस्थापनजस्ता काममा उनीहरू सक्रिय सहभागी छन्।

कार्यक्रम कृषि विज्ञ डा. विश्वास सुवेदीको प्राविधिक सुपरिवेक्षणमा सञ्चालित छ। यसले विद्यार्थीहरूलाई श्रम, लगानी, उत्पादनदेखि बजार अनुसन्धान र मार्केटिङसम्बन्धी व्यवहारिक ज्ञान सिकाएको छ।

ि व द्य ा ल य निर्देशक कृष्ण गुरुङका अनुसार, "पाठ्यपुस्तकभन्दा बाहिरको ज्ञान नै भविष्य निर्माणमा टेवा पुऱ्याउँछ भन्ने विश्वासका साथ हामीले यो अभियान सुरु गरेका हौं।"

इन्चार्ज एलिना पराजुलीले विद्यार्थीहरूलाई सानैदेखि लगानी गर्ने सोच, आत्मनिर्भर बन्ने प्रवृत्ति विकास गरिनु आवश्यक रहेको बताइन्। "१२ कक्षा सकिँदा उनीहरू केवल रोजगारी खोज्ने हैन, आफैं व्यवसाय गर्न सक्ने अवस्थामा पुग्नेछन्," उनको भनाइ छ।

अनुशासन इन्चार्ज सुरेश लामाका अनुसार, व्यवहारिक कार्यक्रमले विद्यार्थीहरूमा देखिएको सकारात्मक परिवर्तन प्रेरणादायी छ।

कलेज अध्यक्ष चेतनाथ भण्डारीले अभियानले नयाँ पुस्तालाई आत्मनिर्भर बनाउने दिशामा मार्ग प्रशस्त गरेको उल्लेख गरे। "यसले विद्यार्थीको आत्मविश्वास, नेतृत्व क्षमता र कार्यकुशलता बढाएको छ," उनले भने।

त्यस्तै, स्नातक तहमा पनि द्यद्यब कार्यक्रमअन्तर्गत बैंकिङ तालिम, औद्योगिक अवलोकन भ्रमण (क्ष्लमगकतचष्बर्ी ँष्भमि ख्ष्कष्त) जस्ता व्यावसायिक कार्यक्रम सञ्चालन हुँदै आएका छन्। यही कार्यक्रमहरूको प्रभावले त्रिभुवन विश्वविद्यालय अन्तर्गतको परीक्षामा हिमाल कलेजले दुई पटकसम्म राष्ट्रिय स्तरमै उत्कृष्ट नतिजा ल्याएको वरिष्ठ प्रशासन अधिकृत विनोद गिरीले जानकारी दिए।

हिमाल कलेजको यो प्रयासले व्यवहारिक शिक्षाको खाँचोलाई उजागर गर्नुका साथै अन्य शिक्षण संस्थाहरूका लागि पनि अनुकरणीय मार्ग देखाएको छ।

# नेपालसामु ९७ रनमै समेटियो स्कटल्याण्ड



काठमाडौं । स्कटल्याण्डमा जारी त्रिकोणात्मक टी२० सिरिजअन्तर्गत भइरहेको तेस्रो खेलमा घरेलु टोलीले नेपाललाई ९८ रन लक्ष्य दिएको छ । नेपाली बलर लगातार हावी भएपछि स्कटल्याण्डले १०० रन पनि जोड्न नसकेको हो ।

नेपालका लागि सन्दीप लामिछानेले सर्वाधिक चार विकेट लिए । लामिछानेले १२.२ ओभरमा स्कटल्याण्डका क्रिस्टोफर म्याकब्रिज, १२.३ ओभरमा म्याथ्यू क्रस, १६.३ ओभरमा सफायान शरीफ र १६.५ ओभरमा ज्याक जार्भिसको विकेट लिएका हुन् ।

अराउण्डर दीपेन्द्रसिंह ऐरीले दुई, करण केसीले दुई र ललित राजवंशीले एक विकेट लिए । ऐरीले ०.५ ओभरमा स्कटल्याण्डका ओपनर ब्याटर मार्क वाटको विकेट लिएका थिए । १९.४ ओभरमा स्कटल्याण्डको दशौं विकेटका लिँदै ऐरीले नै मिचेल लिस्कलाई पेभेलियन फर्काइदिए ।

१.३ ओभरमा स्कटल्याण्डका अर्का ओपनर जर्ज मुन्सीलाई करण केसीले ऐरीको हातबाट क्याचआउट गराए । १.४ ओभरमा अर्का ब्याट्सम्यान लियाम नायलर पनि करणले लोकेश बमको थ्रोइङमा विकेटकिपर अनिल साहको हातबाट रनआउट गराए ।

३.४ ओभरमा करणले नै स्कटल्याण्डका अर्का ब्याट्सम्यान फिन्ले क्याक्कार्थलाई जम्मा दुई रनमा रुपेश सिंहको क्याचबाट आउट गराए ।

४.५ ओभरमा ललितले ब्राण्डन म्याकमुलनलाई रोहित पौडेलको हातबाट क्याचआउट गराए । म्याकमुलनले जम्मा १० रन जोडे ।

नेपालले घरेलु टोलीविरुद्ध टस जितेर पहिलो इनिङमा बलिङ गर्दैछ । सिरिजको तेस्रो खेलमा टस जितेर नेपालले स्कटल्याण्डविरुद्ध फिल्डिङ रोजेको हो ।

सोमबार नेदरल्याण्डस्विरुद्ध तेस्रो ओभरमा खेल गुमाएको नेपाल आज पहिलो जीत निकाल्ने प्रयासमा छ ।

पहिलो खेलमा नेदरल्याण्डस्लाई ३९ अङ्कले पराजित गर्दै दुई अङ्क जोडेको स्कटल्याण्ड पनि लगातार दोस्रो जीतको खोजीमा हुनेछ ।

# एसईईपछि आईटीमा अवसर: सीप सिक्ने, करिअर बनाउने उत्तम समय



काठमाडौं । राष्ट्रिय परीक्षा बोर्डले माध्यमिक शिक्षा परीक्षा (एसईई) को नतिजा असारको तेस्रो सातामा सार्वजनिक गर्ने तयारी गरिरहेको छ । करिब पाँच लाख विद्यार्थी सहभागी परीक्षाको नतिजा अन्तिम चरणको परीक्षणपछि छिट्टै सार्वजनिक गरिने बोर्डले जनाएको छ ।

अब प्रश्न उठ्छ- एसईईपछि कसरी अगाडि बढ्ने र के गर्ने ? विशेषगरी सूचना प्रविधि (आईटी) क्षेत्रमा रुचि भएका विद्यार्थीहरूका लागि के-कस्ता अवसर उपलब्ध छन्। त्यस बारेमा केही जानकारी प्राप्त गरौं ।

आईटीको यात्रा कहाबाट सुरु गर्ने ?

विद्यालय तहमा कम्प्युटर विषयको अध्यापन हुने भए पनि एसईईपछि सीटीईभीटी (ऋत्भ्ख्त) बाहेक अन्य शैक्षिक निकायले छुट्टै आईटी कोर्स प्रदान गर्दैनन् । यद्यपि, सीटीईभीटीले प्रि-डिप्लोमा (१८ महिने) तहमा कम्प्युटर इन्जिनियरिङ, कम्प्युटर एप्लिकेसन र सेक्रेटरियल म्यानेजमेन्टजस्ता कोर्स सञ्चालन गरिरहेको छ ।

त्यस्तै, डिप्लोमा तह (३ वर्षे) मा कम्प्युटर इन्जिनियरिङ र इन्फरमेसन टेक्नोलोजी (आईटी) पढ्न सकिन्छ । यी कोर्स देशभरका १०० भन्दा बढी शिक्षण संस्थामा उपलब्ध छन् ।

शैक्षिक अध्ययनसँगै व्यावसायिक सीप पनि

आईटीमा करिअर बनाउन चाहने विद्यार्थीहरूका लागि प्राविधिक सीप सिक्न थुप्रै विकल्प छन् । कक्षा ११ पढ्दै गर्दा खाली समय सदुपयोग गरी निम्न सीपहरू सिक्न सकिन्छ:

ग्राफिक्स डिजाइन, भिडियो एडिटिङ, फोटोग्राफी: युट्युब, अनलाइन प्लेटफर्म वा इन्स्टिच्युटबाट सिक्न सकिने मल्टिमिडिया सीपहरू ।

प्रोग्रामिङ भाषा: ज्त्मि, ऋक्क, व्खब, ऋ, ऋ++ आदि सिकेर वेबसाइट वा मोबाइल एप निर्माणमा हात हाल्न सकिन्छ ।

डिजिटल मार्केटिङ: SEO, SEM, कन्टेन्ट मार्केटिङजस्ता डिजिटल सीपले भविष्यमा अनलाइन व्यवसाय वा जागिरको बाटो खोल्न सक्छ ।

रोबोटिक्स र IOT -Internet of Things): हार्डवेयर मन पराउने विद्यार्थीका लागि रोचक र प्रयोगात्मक क्षेत्र ।

कम्प्युटर हार्डवेयर र रिपेयरिङ: ल्यापटप/कम्प्युटर मर्मत सिकेर आफ्नै सर्भिस स्टार्टअप सुरु गर्न सकिन्छ ।

सुरु गर्न ढिलो नगर्नुहोस्

एसईईपछि नै आईटीमा सीप सिक्न थाल्दा भविष्यमा करिअर बनाउने आधार बलियो बन्छ । आजको युगमा अनलाइन स्रोतहरू (जस्तै युट्युब, कोर्स वेबसाइटहरू) वा नजिकैको प्राविधिक इन्स्टिच्युटमार्फत निःशुल्क वा कम लागतमा धेरै कुरा सिक्न सकिन्छ ।

नेपालमा आईटी क्षेत्र तीव्र रुपमा विस्तार भइरहेको छ । स्थानीय कम्पनीहरूसँगै अन्तर ाष्ट्रिय रोजगारीका अवसर पनि बढ्दो छन् ।

तसर्थ एसईईपछि समय बर्बाद नगरी, रुचिअनुसार आईटी क्षेत्रको कुनै एउटा साइड छान्नुहोस्, अभ्यास गर्नुहोस्, प्रोजेक्टहरू बनाउनुहोस्, अनि भविष्यको लागि बलियो आधार तयार गर्ने कार्यमा अहिले नै लागौं ।

# क्लब विश्वकप : लस एन्जलसमाथि चेल्सीको सानदार जित




काठमाडौं । फिफा क्लब विश्वकपको समूह 'डी'को खेलमा चेल्सी विजयी भएको छ । चेल्सीले लस एन्जलसलाई २-० ले हराएको हो । खेलको ३४ औं मिनेटमा पेड्रो नेटोको गोलमा अग्रता लिएको चेल्सीका लागि ७९ औं मिनेटमा इन्डो फर्नान्डेजले दोस्रो गोल गरे । एल एन्जलसले गोल गर्ने कुनै पनि अवसर नबनाउँदा चेल्सीले एकपक्षीय जित निकालेको हो ।

त्यस्तै फिफा क्लब विश्वकपको सोमबारै भएको खेलमा बोटाफेगोले सिटललाई २-१ ले हराएको छ । समूह 'बी'मा रहेका यी दुई टोली बीचको खेलको २८ औं मिनेटमा ब्राजिलियन क्लबका लागि जाइरले गोल गरेका थिए । विजयी ब्राजिलियनका लागि ४४ औं मिनेटमा इगर जिससले दोस्रो गोल गरेका हुन् ।

सिटल सन्डर्सका लागि ७५ औं मिनेटमा रोलडनले एक गोल फर्काए ।

त्यस्तै फिफा क्लब विश्वकपको समूह 'सी'को सनसनीपूर्ण खेलमा बोका जुनियर र बेनफिकाले बराबरी खेलेका छन् । यी दुई टिमले सनसनीपूर्ण खेलमा २-२ गोलको बराबरी गर्दै अङ्क बाँडेका हुन् । खेलको २१ औं मिनेटमा मिगुयल मेरिन्सियलले बोकालाई अग्रता दिलाएका थिए ।

यसैगरी २७ औं मिनेटमा रोड्रिगो बाटाग्लीयाले गोल गरेपछि बोकाले सहजै जित हातपर्ने सम्भावना देखिएको थियो ।

पहिलो हाफमा इन्जुरी समयमा एन्जल डि मारियाले बेनफिकाका लागि पहिलो गोल गरे । ८४ औं मिनेटमा निकोलास ओटामेन्डीले अर्को गोल गर्दै अन्तिम समयमा सनसनीपूर्ण बराबरी गरेका हुन् ।

समूह 'डी'मा रहेका अन्य टोलीमा ब्राजिलको फ्लेमिङ्गो र अफ्रिकन टोली युएन टियुनास छन् । एक महिना लामो प्रतियोगितामा ३२ टोली सहभागी छन् । प्रतियोगिता लिग कम नकआउटको आधारमा सञ्चालन भइरहेको छ ।

## विरोधको....

र आवश्यक परे बैठकबाट निकाल्नुपर्छ ।’

भिजिट भिसा प्रकरणमा गृहमन्त्री रमेश लेखकको राजीनामा माग गर्दै रास्वपाले जेठ १३ देखि संसद्मा अवरोध गरिरहेको छ । असार १ र २ गतेको बैठकमा रास्वपाले पूरै समय नाराबाजी गरेको थियो । रास्वपा सांसद डा. चन्दा कार्की भण्डारीले मानव तस्करीविरुद्धको आन्दोलनमा ऐक्यबद्धता स्वरूप नीलो रिबन लगाएर आएको बताइन् ।

सभामुखको पहल निष्क्रिय

सोमबार सभामुख देवराज घिमिरेले सबै दलका प्रमुख सचेतक र नेताहरूसँग छलफल गरे पनि कुनै ठोस सहमति जुट्न सकेन । उनले बालुवाटारमा रास्वपाका नेताहरूसँग अलग्गै भेट पनि गरेका थिए । रास्वपाका कार्यबाहक सभापति डीपी अर्यालले भने, “हामी अझै पनि छानबिन समिति गठन र गृहमन्त्रीको राजीनामाको मागमा अडिग छौं । माग नपुगेसम्म संसद् अवरोध जारी रहन्छ ।”

राप्रपाको बहिष्कार

यता, रास्वपासँगै केही दिन अघिसम्म आन्दोलनमा देखिएको राप्रपा पनि असन्तुष्ट देखिएको छ । तर, वेल घेर्ने हैसियतमा नआई उसले बैठक बहिष्कार गर्ने रणनीति अख्तियार गरेको छ । अवरोधबिना संसद् नचलेसम्म सहभागिता जनाउने पक्षमा नभएको उसले प्रस्ट पारेको छ ।

रास्वपाको संसद् अवरोधले हाल प्रतिनिधिसभामा असहज स्थिति बनाएको छ । सत्ता पक्षका लागि कानुनी प्रक्रियाअनुसार संसद् सञ्चालन गर्नु चुनौतीपूर्ण बन्दै गएको छ भने रास्वपाका लागि आफ्ना माग पुरा गराउन थप दबाब सिर्जना गर्ने उपाय खोज्नु पर्ने अवस्था देखिन्छ । यस्तोमा दीर्घकालीन समाधान संवाद र सहमतिको आधारमै खोज्नुपर्ने देखिन्छ ।

## मध्यपुर थिमि...

सञ्जाल मार्फत आउने २०८४ सालको निर्वाचनमा हेरौला भन्दै भएको पोष्टहरु मार्फत आएका चेतावनीपूर्ण भनाईको सामना गर्न तयार रहेको मेयर श्रेष्ठले बताए । उनले नेपालको संविधानले जोसुकै नेपालीलाई चुनाव लड्ने अधिकार दिएको हुँदा २०८४ मा हेरौला भए हामी पनि हेरौंला भन्दै त्यसको सामना गर्न आफूहरु तयार रहेको प्रष्ट पारे ।

प्रमुख श्रेष्ठले निलबाराहीको संरक्षणमा नगरपालिका मुक दर्शक भएर नबसेको जानकारी गराउँदै हाल नेपालको ऐन, कानूनमा रहेको जटिलताका कारण सोचे अनुरुपको कार्य गर्न नसकिएको र नगरपालिका एक्लैले धेरै लागतको परियोजना शुरु गर्न नसकिने भएकोले आवश्यक पहल गर्दा ढिला हुन गएको जिकिर गरे । साथै उनले केही अभियन्ताहरुले नगरपालिकालाई विना कुनै जानकारी नदिई, स्वीकृति नै नलिई आफूखुशी जनश्रमदान, चन्दा संकलनसमेत गरिरहेको कार्यप्रति असन्तुष्टी जनाउनुका साथै निलवाराही परिसरको पहिरो नियन्त्रणमा डिपिआर तयार भएको र सो अनुरुप ठेक्का प्रक्रियासमेत अघि बढि सकेको अवस्थामा डिपिआरको बारेमा आवश्यक सूचना प्राप्त गर्न नगरपालिकासँग सहकायृ गर्दै हेर्न सकिने जानकारी दिए ।

निलबाराही मध्यपुर थिमि नगरपालिकाको वडा नं ९ मा पर्ने ऐतिहासिक स्थल हो । यो नेपाल मन्दलको उपत्यकामा रहेका चार बाराहीमध्ये एक मुख्य बाराहीस्थान हो । वर्तमानमा यो ऐतिहासिक स्थल पहिरोको जोखिममा रहेको छ । साथै यो स्थल बादेको एतिहासिक नाच निलबाराही गणनाच र बोदेमा नै हुने बिस्का जात्राको जिब्रो छेड्ने जात्राको किम्बदन्तीसँग समेत जोडिएको छ । यही कारण यो वर्षा शुरु हुने समयमा पहिरोको जाखिम अझ बढी हुने भएकोले यसको संरक्षण गर्न भन्दै केही अभियन्ताहरुको सक्रियतामा स्वस्फूर्त रुपमा अहिले जनस्तरबाट कामहरु भइरहेका छन् ।

कार्यक्रममा नेपाल पत्रकार महासंघ भक्तपुरका अध्यक्ष सुन्दर सिल्पकार, पत्रकारहरु रत्न श्रेष्ठ, कृष्ण प्रजापति, कृष्ण किसी, विज्ञान श्रेष्ठलगायतले विभिन्न विषयमा जिज्ञासा राखेको थियो । पत्रकारहरुले राखेका जिज्ञासा र प्रश्नहरुको जवाफ नगर उपप्रमुख विजयकृष्ण श्रेष्ठ, नगरपालिकाका १, ६, र ८ नं वडाका वडा अध्यक्षहरुले दिएका थिए । कार्यक्रम समाजका अध्यक्ष चन्द्रकृष्ण श्रेष्ठ (गोपाल) को सभापतित्वमा भएको थियो ।

## दोस्रो....

फोरम र नेपाल आदिवासी जनजाति पत्रकार महासंघ (फोनिज) सहआयोजक थिए ।

उद्घाटन र समापन समारोह

प्रतिनिधि सभाका सभामुख देवराज घिमिरेले सम्मेलन उद्घाटन गर्दै बहुभाषिक समाजमा मातृभाषा पत्रकारिताले सामाजिक एकता र समावेशीतालाई बलियो बनाउने विश्वास व्यक्त गरे । उनले सरकारी सञ्चार माध्यममा मातृभाषाबाट सामग्री प्रसारण भइसकेको उल्लेख गर्दै अब यसलाई अझ संस्थागत र व्यापक बनाउनु पर्ने धारणा राखे । उद्घाटन कार्यक्रम ललितपुरमा भएको थियो ।

सम्मेलनको समापन कार्यक्रमलाई सम्वोधन गर्दै मध्यपुर थिमि नगरपालिकाका मेयर सुरेन्द्र श्रेष्ठले स्थानीय सरकारले विद्यालय तहमा मातृभाषाको पढाइ सुरु गर्ने तयारी गरिरहेको जानकारी गराउँदै मातृभाषा संरक्षणप्रति स्थानीय सरकार प्रतिबद्ध रहेको जनाए । समापन भक्तपुरको मध्यपुर थिमि नगरपालिकामा भएको थियो ।

धर्मादित्यको योगदान र सम्मान

सम्मेलन धर्मादित्य धर्माचार्य (जगतमान वैद्य) को स्मृतिमा आयोजना गरिएको थियो, जसले १०१ वर्षअघि नेपाल भाषामा ‘बुद्ध धर्म व नेपालभाषा’ पत्रिका प्रकाशन गरी नेपालमा मातृभाषा पत्रकारिताको सुरुआत गरेका थिए । यही योगदानको स्मरण गर्दै पाँच जना वरिष्ठ पत्रकारहरू मल्ल के सुन्दर, गणेश राई, अजितमान तामाङ्ग, लगायतलाई ‘धर्मादित्य मातृभाषा पत्रकारिता सम्मान’ प्रदान गरिएको थियो ।

छलफलका एजेन्डा र कार्यपत्र

सम्मेलनमा सात वटा मुख्य एजेन्डामा छलफल भएको थियो, जसमा मातृभाषा पत्रकारिताको अभ्यास, सरकारी संचार माध्यममा मातृभाषाको भूमिका, धर्मादित्यदेखि हालसम्मको विकास यात्रा, बहुल समाजमा पत्रकारिताको योगदान, संस्थागत तथा बजार व्यवस्थासम्बन्धी विषयहरू समेटिएका थिए ।

गोरखापत्रका पूर्व प्रधान सम्पादक पुस्करभक्त माथेमाले सरकारी सञ्चार गृहमा मातृभाषा पत्रकारिता अभ्यास सम्बन्धी कार्यपत्र प्रस्तुत गरेका थिए ।

घोषणापत्रका मुख्य बुँदाहरू

सम्मेलन अन्त्यमा जारी ७ बुँदे काठमाडौं घोषणापत्रमा निम्न मागहरू समेटिएका छन्ः

यस घोषणापत्र र सिफारिसहरू ७बुँदे घोषणापत्रलाई यसैसाथ स्वीकार गर्नुहोस् र दक्षिण एसियाका सबै सरकारहरू र सरोकारवालाहरूलाई आह्वान गर्नुहोसः

१। उहाँको उत्कृष्ट योगदानको कदर गर्दै, धर्मादित्य धर्माचार्यलाई नेपाल सरकारले विधिवत सम्मान र मान्यता दिनुपर्छ।

२। राज्य समर्थन र नीतिगत प्रतिबद्धता नेपाल सरकार लगायत सार्क सरकारका प्रमुखहरूलाई मातृभाषामा काम गर्ने पत्रकार हरूको अधिकारको रक्षा गर्ने मिडिया नीतिहरू तर्जुमा र लागू गर्न र स्थानीय तथा आदिवासी भाषाहरूमा सञ्चालित मिडिया आउटलेटहरूको विकास र दिगोपनका लागि बढ्दो बजेट सहयोग विनियोजन गर्न आग्रह गरिएको छ।

३। सरकारले आदिवासी तथा आदिवासी भाषाहरूमा पत्रकारितालाई सामाजिक न्याय र सांस्कृतिक संरक्षणको उपकरणको रूपमा मान्यता दिनुपर्छ र प्रवर्द्धन गर्नुपर्छ, यी समुदायहरूलाई आफ्नो आवाज उठाउन र सान्दर्भिक समाचार र जानकारीमा पहुँच गर्न प्लेटफर्महरू छन् भनी सुनिश्चित गर्नुपर्छ।

४। मातृभाषामा काम गर्ने पत्रकारहरूका लागि नियमित प्रशिक्षण कार्यक्रम, कार्यशाला र फेलोशिपहरू आयोजना गर्न तत्काल कदम चाल्नुपर्छ।

५। संयुक्त राष्ट्र संघ, युनेस्को, अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू र विकास साझेदार हरूलाई आफ्नो विकास एजेन्डा र कोष प्राथमिकताहरूमा मातृभाषा पत्रकारिता समावेश गर्न, प्राविधिक सहयोग, क्षमता निर्माण समर्थन, र तल्लो तहका मिडिया पहलहरूको लागि स्रोत परिचालन प्रदान गर्न आह्वान गरिएको छ।

६। विश्वविद्यालयहरू, मिडिया संस्थाहरू र अनुसन्धान निकायहरूले यस क्षेत्रमा मातृभाषा पत्रकारिताको वर्तमान अवस्था, चुनौतीहरू र सम्भावनाहरूको बारेमा व्यापक अध्ययन गर्नुपर्छ र सरकारहरू र प्रविधि प्लेटफर्महरूले अनलाइन मातृभाषा पत्रकारितालाई प्रवर्द्धन गर्न डिजिटल उपकरणहरू, फन्टहरू र भाषा अनुवाद प्रशोधन प्रविधिहरूमा लगानी गर्नुपर्छ र स्थानीय मिडिया आउटलेटहरूलाई मातृभाषामा डिजिटल ढाँचामा संक्रमण गर्न सहयोग दिनुपर्छ।

७। मातृभाषा पत्रकारिताको प्रवर्द्धनका लागि काम गर्ने राष्ट्रिय र क्षेत्रीय पत्रकार संघहरूलाई मान्यता दिइनुपर्छ र उनीहरूको पहुँच र वकालत विस्तार गर्न आर्थिक रूपमा सहयोग गरिनुपर्छ। निष्कर्षस् हामी, सहभागीहरू, हाम्रो मातृभाषामा पत्रकारिता डिजिटल युगमा मात्र बाँच्दैन तर फस्टाउँछ भन्ने कुरा सुनिश्चित गर्न सहकार्य गरेर काम गर्ने हाम्रो संकल्प दोहोर्याउँछौं। हामी सबै सरोकारवालाहरूलाई यी शब्दहरूलाई कार्यमा रूपान्तरण गर्न आह्वान गर्छौं ताकि दक्षिण एसियाका विविध आवाजहरूले स्वतन्त्र र निर्भयतापूर्वक बोल्न, रिपोर्ट गर्न र प्रेरणा दिन जारी राख्न सकून्।

घोषणापत्रमा नेपाल, भारत र बंगलादेशका संस्थागत प्रतिनिधिहरूले हस्ताक्षर गरेका थिए । ती हुन नृपेन्द्र लाल श्रेष्ठ अध्यक्ष, नेवाः पत्रकारहरूको लागि राष्ट्रिय मञ्च (नेपाल), राजु लामा अध्यक्ष, सार्क पत्रकार मञ्च (नेपाल), लक्की चौधरी अध्यक्ष, फोनिज (नेपाल), मोहम्मद अब्दुर रहमान महासचिव, सार्क पत्रकार मञ्च (बंगलादेश) र डा. शशिभूषण कुमार अध्यक्ष, सार्क पत्रकार मञ्च, बिहार (भारत)

“मातृभाषामा सञ्चालित पत्रकारिता डिजिटल युगमा नबाँच्ने होइन, अझ सशक्त हुँदै फस्टाउनेछ । त्यसका लागि हामी सबैको साझा प्रयास अपरिहार्य छ ।”

## तीन वटै....

गरेको धिमे बाजा प्रशिक्षणमा ५३ जना युवायुवतीहरु प्रशिक्षित भएको कार्यक्रम संयोजक सुशन प्रजापतिले जानकारी दिए ।

त्यस्तै, मध्यपुर थिमि नगरपालिकाका मेयर सुरेन्द्र श्रेष्ठले नगर क्षेत्रको कला, संस्कृति, बाजागाजा संरक्षणको लागि नगरपालिकाले आवश्यक सहकार्य गर्ने प्रतिबद्धता जनाए । धिमे बाजा, बांसुरी, नौ बाजा, स्वायलि लगायत लोपोन्मुक बाजा संरक्षण गर्नुपर्नेमा जोड दिँदै धिमे बाजा प्रशिक्षण कार्यक्रम आयोजकलाई धन्यवाद दिए ।

त्यस्तै, बागमती प्रदेश सरकारकी सांसद माननीय धनेश्वरी प्रजापतिले बाजागाजाको जगेर्ना गर्ने अभियानलाई निरन्तरता दिनुपर्नेमा जोड दिदैं नेवाः संस्कृतिले नेपाललाई विश्वभर चिनाएको सन्दर्भ कोट्याउँदै उनले सांस्कृतिक समृद्धिको लागि राष्ट्रभक्तहरु एकीकृत हुनुपर्नेमा जोड दिए ।

कार्यक्रममा मध्यपुर थिमिका श्रीगोपाल प्रजापतिलगायत ६ जना थिमि भैलःका गुरुहरु र पाँच जना बाजा गुरुहरुलाई सम्मान गरिएको थियो । औपचारिक बाजा प्रशिक्षण कार्यक्रममा ४ वर्षे बालकदेखि अधैवैंशे पुरुष र महिलाहरु पनि सहभागी रहेको थियो ।

केही दसक अगाडिसम्म महिलालाई धिमे बाजाबाट औपचारिक रुपमा दिक्षित गर्न नहुने मान्यता थियो । महिनावारी भएकी महिलाको उपस्थितिले नाट्यश्वर आह्वान गरिने पूजाविधिमा बाधाविघ्न पैदा हुने बताइन्थ्यो । तर बदलिंदो परिस्थितिसँगै किसली पूजा गरी परम्परागत शैलीले दिइने प्रशिक्षणमा महिला सहभागिता बढ्दै गएको देखिन्छ । धिमे नृत्य तथा बाजा प्रस्तुति समेत गरिएको कार्यक्रममा जनप्रतिनिधि, सुरक्षा निकायका प्रतिनिधि, भैलः नाचका गुरुहरु, संस्कृतिप्रेमी तथा स्थानियबासीहरुको उल्लेख्य सहभागिता थियो ।

## प्रमाणविना....

सकिने थियो। तर, प्रमाणबिनाका गम्भीर आरोपबाट व्यक्तिको सामाजिक प्रतिष्ठामा आँच आउनु न्यायोचित होइन।

यस्तो स्थिति पत्रकारिताको विश्वसनीयतामाथि गम्भीर प्रश्न उठाउँछ। तथ्यहीन सामग्री सार्वजनिक गर्दा समग्र पत्रकारिता क्षेत्रको प्रतिष्ठामा आघात पुग्ने खतरा हुन्छ।

साइबर कानुन होइन, नियामक निकायमार्फत छानबिन गरौं

यद्यपि पाठकले प्रस्तुत गरेको सामग्री आपत्तिजनक देखिए पनि त्यसको अनुसन्धान साइबर अपराध अन्तर्गत गर्नु उपयुक्त होइन। प्रेस काउन्सिल नेपाल जस्ता नियामक निकायहरू यस्ता उजुरीको उचित थलो हुन्।

यदि कसैलाई उक्त सामग्री आपत्तिजनक लाग्छ भने पहिला प्रेस काउन्सिलमा उजुरी गर्न सकिन्छ। त्यसपछि पनि सन्तोषजनक निर्णय नआएमा अदालतमार्फत मानहानी मुद्दा दर्ता गर्न सकिन्छ। यसरी वैधानिक प्रक्रिया हुँदाहुँदै साइबर कानुन प्रयोग गरी पत्रकारलाई डरत्रास देखाउनु प्रेस स्वतन्त्रताविरुद्धको कार्य हो।

पत्रकारिता क्षेत्रभित्रको आत्मालोचना आवश्यक

हाल पत्रकारिता क्षेत्रमा तथ्य र प्रमाणभन्दा लोकप्रियता र ‘भ्युज’को लोभमा तथ्यहीन र अमर्यादित प्रश्न तथा आरोपको प्रवृत्ति मौलाउँदै गएको छ। जनप्रतिनिधिलाई ‘हिटलर’, ‘ हनुमान’ जस्ता अमर्यादित विशेषणसहित प्रश्न सोध्ने शैली पत्रकारिताको मर्यादाविपरीत हो।

त्यस्तै, टेलिभिजन टक शो तथा कमेडी कार्यक्रमहरूमा व्यक्तिविशेषको चरित्र हत्या गर्ने शैली पनि गम्भीर चिन्ताको विषय बनिरहेको छ। उदाहरणका लागि, कार्यकारी निर्देशक हितेन्द्रदेव शाक्यलाई पटकपटक व्यंग्यपूर्वक अपमानजनक रूपमा चित्रण गरिनु अस्वीकार्य हो।

पत्रकारिता सुधारको खाँचो

मूलधारका मिडियाहरूमा अहिले पनि जिम्मेवार र आचारसंहिता पालना गर्ने पत्रकारहरू छन्। तर तिनको प्रभाव ओझेलमा परेको छ। अहिलेको आवश्यकता भनेको मिडिया क्षेत्रमा देखिएका विकृति र विसङ्गतिमाथि कठोर आत्मालोचना गर्नु हो।

अतः पत्रकारिताको न्यूनतम् मूल्य, मान्यता र आचारसंहिता पालना गर्दै विश्वसनीयता जोगाउनु आजको आवश्यकता हो। प्रमाणबिनाका आरोपहरूलाई पत्रकारिताको नाममा स्वीकार्नु न लोकतन्त्रको हितमा हो, न मिडियाको ।

अन्तमा

पत्रकारले तथ्य र प्रमाणका आधारमा काम गर्नुपर्छ। सामाजिक सञ्जालको अराजकता देखाउँदै मिडिया स्वेच्छाचारी बन्न मिल्दैन। यस्ता विषयमा नियमन प्रेस काउन्सिलमार्फत हुनुपर्छ, न कि साइबर अपराधको आरोप लगाएर डरत्रास सिर्जना गर्ने प्रयासमार्फत।

प्रेस स्वतन्त्रता रक्षा गर्न कानुनी प्रक्रिया पालना गर्न जरूरी छ, र त्यसका लागि स्वयं पत्रकारिताले पनि आफ्नो मर्यादा कायम राख्नुपर्ने जिम्मेवारी वहन गर्नुपर्छ ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# के विश्व फेरि "स्क्विड गेम" को लागि तयार छ ?

सन् २०२१ को सेप्टेम्बरमा नेटफ्लिक्समा सार्वजनिक भएको दक्षिण कोरियाली शृंखला स्क्विड गेम ले विश्वभर तहल्का मच्चायो। खेलजस्तो नाम, अचम्म लाग्दो कथा, मानवीय संवेदनासँग जोडिएको सामाजिक यथार्थ र तनावपूर्ण दृश्यले यसले छोटो समयमा नै ऐतिहासिक सफलता प्राप्त गर्‍यो।

बाल्यकालका सरल खेललाई प्राणघातक प्रतिस्पर्धाका रूपमा रूपान्तरण गरिएको यस शृंखलाले एउटा जटिल प्रश्न उठायो - पैसाका लागि मानिसले कहाँसम्म जान सक्छ? जीवनको मूल्य के हो? धनीहरूका लागि गरिबको पीडा केवल खेल हो त? समाजमा यस्तै संवेदनहीनता हाबी छ भने, हामी कसरी बाँच्छौं?

'स्क्विड गेम' एउटा मनोरञ्जन मात्र होइन, समाजको निर्मम सन्दर्भ बोकेको गहिरो थ्रीलर पनि हो। आर्थिक, सामाजिक र राजनीतिक हिसाबले विभाजित दक्षिण कोरियाली समाजको प्रतिनिधि चित्र यो शृंखलामा देखिन्छ।

अब यस शृंखलाको तेस्रो सिजन आउँदैछ, जसले दर्शकमा चासोको नयाँ लहर ल्याएको छ। दोस्रो सिजन जति सफल भयो, त्यसले तेस्रो सिजनप्रति आशा र जिज्ञासा झन् बढाएको छ। मुख्य पात्र गी-हुनको अधुरो यात्रा, उसले चालेका कदम, र उसको अन्तिम निर्णयको प्रतिक्षामा संसारभरका दर्शक छन्।

नेटफ्लिक्समा पहिलो सिजन २६५ मिलियन पटकभन्दा बढी हेरिएको थियो, जुन अहिलेसम्मकै सबैभन्दा धेरै हेर्ने सिजन बन्न पुग्यो। दोस्रो सिजन पनि प्रिमियर भएको चार दिनभित्रै ६८ मिलियन पटक हेरियो, र केही सातामै १५२.५ मिलियन पटकसम्म पुगेको तथ्यांकले यसको लोकप्रियता अझै झन प्रष्ट पार्छ।

पहिलो सिजनमा गहिरो ऋणमा फसेका ४५६ जना व्यक्तिलाई पैसाको लोभमा एक खतरनाक खेलमा सहभागी गराइन्छ, जसमा हारको अर्थ मृत्यु हुन्छ। बाल्यकालका खेलमा लुकेको जोखिम र त्राससँगै शृंखलाले सामाजिक असमानता, गरिबी र मानवीय मूल्यका विषय उठाउँछ।

मुख्य पात्र गी-हुनले पहिलो सिजनको अन्त्यमा खेल जिते पनि, त्यसले ल्याएको पैसा उनले आफ्नो आत्मीयतामाथि गरेका सम्झौताहरू र साथीहरूको मृत्युको मूल्यमा प्राप्त गर्छन्। दोस्रो सिजनमा उनी फेरि खेलमा फर्कन्छन्, तर यसपटक उद्देश्य फरक छ- खेल अन्त्य गर्नु।

'फ्रन्ट म्यान' को नेतृत्वमा रहेको रहस्यमय संस्था र त्यसको पछाडि रहेका धनी 'भीआईपी' हरूलाई चुनौती दिन गी-हुन तयार हुन्छन्। यस क्रममा शृंखलाले अझ गहिरो राजनीतिक र आर्थिक प्रश्नहरू उठाउँछ - कसरी मानिसको जीवन र पीडालाई मनोरञ्जनमा रूपान्तरण गरिन्छ?

तेस्रो सिजन 'स्क्विड गेम' को अन्तिम अध्याय हुने अपेक्षा गरिएको छ। गी-हुनको अन्तिम विद्रोह, व्यवस्थाविरुद्धको लडाइँ, र सम्भावित विजय या हार- यी सबै घटनाले दर्शकलाई झन् थप उत्कण्ठित बनाएको छ।

शृंखलाको लोकप्रियताले कोरियाली विषयवस्तुलाई विश्व बजारमा पुर्‍याउने ढोका खोलिदिएको छ। यसको प्रभाव स्वरूप नेटफ्लिक्सजस्ता स्ट्रिमिङ प्लाटफर्महरूले दक्षिण कोरियाली तथा भारतीय सामग्रीमा अर्बौं डलर लगानी गरिरहेका छन्। 'स्क्विड गेम'ले सिद्ध गर्‍यो कि बलियो कथा, मौलिकता र सामाजिक सन्देश समेटिएको कन्टेन्ट भाषाको सीमाभन्दा पर जान सक्छ।

नेपाली दर्शकहरू पनि यस शृंखलासँग भावनात्मक रूपमा जोडिएका छन्। नेपाली, हिन्दी, स्पेनी लगायत थुप्रै भाषामा अनुवाद भएपछि यो शृंखला नेपालमै पनि अत्यन्त लोकप्रिय बन्यो। विशेषगरी के-पप र कोरियन ड्रामासँग जुडिएको नेपाली युवापुस्ताले 'स्क्विड गेम'लाई केवल एक श्रृंखला होइन, एक भावना मानेका छन्।

अब प्रश्न उठ्छ- गी-हुनले व्यवस्थालाई ध्वस्त पार्न सक्लान्? नयाँ पात्रहरू कसरी जोडिएलान्? के खेल सधैंका लागि बन्द हुनेछ, या अझ क्रूर संस्करण आउनेछ?

यी प्रश्नहरूको जवाफ सिजन ३ ले दिनेछ। तबसम्म, यो भन्न सकिन्छ - 'स्क्विड गेम' फेरि एकपटक विश्वलाई चकित पार्न तयार छ।

के तपाईं पनि 'स्क्विड गेम' खेल्न तयार हुनुहुन्छ?

'स्क्विड गेम'को तेस्रो सिजनको अन्तिम ट्रेलर रिलिज भएको छ, जुन निकै मर्मस्पर्शी र सशक्त छ। यसका अघिल्ला दुबै श्रृंखलाले नेटफ्लिक्समा भ्यूअर्ससिपमा कीर्तिमान रचेका छन् ।

दोस्रो सिजन रिलिज तयारीमा छ । दर्शक नयाँ तर अन्तिम श्रृंखलालाई लिएर अधैर्य छन् । किनकी यसमा अन्तिम लडाइ देखाइनेछ ।

सबैजना श्रृंखलाका मुख्य पात्र गि-हुन खेलमा कसरी फर्किन्छन् र बदला लिन्छन् भन्ने कुरा जान्न चाहन्छन् । उनले यो रक्तपातपूर्ण खेललाई कसरी पर्दाफास गर्नेछन् भन्ने कुरा जान्ने आशा दर्शकको छ ।

यसैबीच, निर्माताले 'स्क्विड गेम' को तेस्रो सिजनको अन्तिम ट्रेलर जारी गरेका छन् । ट्रेलरमा, खेलाडी नम्बर ४५६ अर्थात् गि-हुनको खतरनाक रूप देखाइएको छ । उनी यो रक्तपातपूर्ण खेल अन्त्य गर्न दृढ छन् । यसका लागि उनी जुनसुकै हदसम्म जान तयार छन् ।

ट्रेलरको सुरुमा, गि-हुन अर्थात् खेलाडी नम्बर ४५६ लाई देखाइएको छ, जसलाई खेलाडी नम्बर १४९ ले सोध्छन्- जे भयो त्यसको लागि तपाईं किन आफूलाई जिम्मेवार ठान्नुहुन्छ ? मैले जे भने पनि, यो जीवन धेरै क्रूर छ ।'

यसपछि, गि-हुन छोरीको बारेमा सोच्छन् र सँगै बिताएका क्षणहरू सम्झन्छन् । बीचमा, गि-हुनले अन्य खेलाडीलाई यो खेल खतरनाक छ र उनीहरूको ज्यान लिन सक्छ भनेर कसरी बुझाउने प्रयास गर्छन् भनेर देखाइएको छ ।

अन्त्यमा, यो खेलको हाकिमले गि-हुनलाई भेट्न बोलाएको देखाइएको छ । त्यसपछि गि-हुन भन्छन् कि उनी यो खेल बन्द नगरेसम्म आराम गर्ने छैनन् । अब हेर्न बाँकी छ कि गि-हुनले यो खेल कसरी पर्दाफास गर्छन् र अनुहारमा लागेको मास्क कसरी हटाउन सक्षम हुनेछन् । 'स्क्विड गेम सिजन ३' जुन २७ देखि नेटफ्लिक्समा स्ट्रिम हुनेछ । ट्रेलरले केही नयाँ नियम र खेलको झलक पनि दिन्छ, जसले यो सिजन धेरै ट्विस्टले भरिएको र धेरै रोमाञ्चक हुने देखाउँछ ।

# "जनै हराएको मान्छे"को नयाँ पोस्टर सार्वजनिक

काठमाडौं । चलचित्र 'जनै हराएको मान्छे : सम्बन्धका धागाहरू'ले क्यारेक्टर लुक्स सार्वजनिक गर्न सुरु गरेको छ । केही दिन अगाडि यो चलचित्रका मुख्य कलाकार विजय बरालको क्यारेक्टर लुक्स सार्वजनिक गरेको निर्माणपक्षले आज भोलाराज सापकोटा र आरुस भुसालको लुक्स सार्वजनिक गरेको छ ।

भोलाराज सापकोटा कमिज, स्टकोट र ढाका टोपीमा छन् । झुस्स दारीमा रहेका उनी थोरै तनावमा देखिएका छन् । सँगै छन् आरुस । झोला बोकेर कपाल मुन्डन गरेको अवस्थामा रातो लुगामा छन् । लुगा पसिनाले निथ्रुक्क भिजेका छन् ।

उनको यो स्वरुपले उनी संस्कृत भाषा पढिरहेको संकेत गरेको छ । पृष्ठभूमिमा रहेका मन्दिरहरूले यसलाई पुष्टि गर्छ । भोलाराजको छोराको भूमिकामा आरुस छन् ।

उनले भनेका छन्, यो संसारमा सबैभन्दा महंगो केरो बाबाको पसिना रहेछ । यसले बाउले छोराका लागि गरेको संघर्ष बुझाउँछ ।

जनै हराएको मान्छे : सम्बन्धका धागाहरू'लाई निर्देशक हिमाल न्यौपानेले निर्देशन गरेका छन् । विजय बराल यो सिनेमाको मुख्य कलाकार हुन् ।

'जनै हराएको मान्छे : सम्बन्धका धागाहरू' भदौ ६ गते रिलिज हुनेछ । यो चलचित्र अहिले पोस्टप्रोडक्सनमा छ ।

चलचित्रको असोसियट निर्देशकमा 'प्रेमगीत ३' अभिनेता मनिष राउत छन् ।

असोसियट निर्देशक राउतका अनुसार, 'जनै हराएको मान्छे'ले बाबु र छोराको सम्बन्धका सूक्ष्म र भावनात्मक धागाहरूलाई केलाउने प्रयास गरेको छ ।

राउतले भने, "यो सम्बन्ध महसुस गर्दा सबैभन्दा गहिरो हुन्छ, तर शब्दमा व्यक्त गर्न कठिन हुन्छ । हामीले यही भावनालाई फिल्ममा उतार्ने कोसिस गरेका छौं ।"

बलियो लाइनअप देखिएको चलचित्रमा विजय, भोलाराज र आरुससँगै अभिनेत्री केकी अधिकारी, अभिनेत्री मिरुना मगर, गौरव पहाडी, सुशांक मैनाली, रियर राई, भावना खपांगी मगर, रुपेश लामा, सुमन थापालागायतको अभिनय रहेको छ ।

पेपरक्लिपको ब्यानरमा निर्माण भएको चलचित्रका निर्माता कमल न्यौपाने र विमल न्यौपाने हुन् । कार्यकारी निर्मातामा नारायण तिमिसिना, चुडामणि सिवाकोटी, आरके मानन्धर, सिआर बस्नेत, फिलिप डिसी र जेम्स महाराजन रहेका छन् ।

थानेश्वर गौतम, अर्जुन पोखरेल, एसडी योगी र प्रसान्त सिवाकोटीको संगीत रहेको चलचित्रमा नवीन गुरुङ डीओपी र कृष्ण परियारको सिनेमेटोग्राफी रहेको छ ।

चलचित्रको कथा, पटकथा र संवाद भानुभक्त ढकालले लेखेका हुन् । दिनेश बहादुर राउत मुख्य सहायक निर्देशक रहेको सिनेमामा तर्कराज न्यौपाने, रविन्द्र नेपाल, मोनिका थापा र आकाश के.सी सहायक निर्देशक रहेका छन् । चलचित्रका निर्माण नियन्त्रक लक्ष्मणराज पौडेल हुन् ।

गोविन्द शाहीको काफिया फिल्मसले वितरणको जिम्मा लिएको छ ।

अल टाइम ब्लक बस्टर चलचित्र 'पूर्णबहादुरको सारंगी'पछि विजय बरालको मुख्य भूमिकामा आउन लागेको यस वर्षको यो पहिलो चलचित्र हो ।

विसं. २०८१ मा नेपाली चलचित्र उद्योगलाई ब्लकबस्टर सिनेमा दिने विजय र केकी 'जनै हराएको मान्छे : सम्बन्धका धागाहरू'को मुख्य भूमिकामा सँगै देखिँदै छन् ।

# मलयालमको 'दृश्यम ३' हिन्दी सास्करण अघि नै रिलिज हुने

काठमाडौं । सुपरस्टार मोहनलाल र निर्देशक जीतु जोसेफ क्राइम सस्पेन्स थ्रिलर दृश्यम:३ को लागि पुनः एकजुट भएका छन् ।

जुन फिल्मको आधिकारिक रूपमा कुनै रिलिज मिति वा टाइमलाइन बिना नै यस वर्षको सुरुमा घोषणा गरिएको थियो। यो सबैभन्दा प्रतीक्षा गरिएको फिल्महरू मध्ये एक हो ।

यसैबिच, अजय देवगनको हेडलाइनमा रहेको दृश्यम: ३ को हिन्दी सँस्करण भने २ अक्टोबर २०२६ मा रिलिज मिति घोषणा गरिएको छ। फिल्मलाई अभिषेक पाठकले निर्देशन गर्नेछन् बाँकी कलाकारमा पुरानै तब्बुलगायत रहन सक्ने जनाइएको छ । यो यस वर्षको अन्त्यमा यो सुटिङमा जानेछ ।

समाचार अनुसार दृष्यम: ३ हिन्दी भर्सन मलयालम संस्करण भन्दा फरक हुनेछ, पहिलो दुई चलचित्रहरू भन्दा अलि धेरै फरक पनि हुनेछ । यसअघिका दुबै श्रृंखला मलायालम चलचित्रहरूको रिमेक थियो। यो अन्य संस्करणहरू बीच ठूलो स्क्रिनमा देखा पर्नेछ ।

रिपोर्ट अनुसार जीतु जोसेफ र मोहनलालले यस वर्ष सेप्टेम्बरमा यस चर्चित फ्रेन्चाइजको तेस्रो किस्ताको छायांकन सुरु गर्नेछन् र यदि यो भयो भने यो सम्भवत: हिन्दी संस्करण पछाडि मात्रै ठूलो पर्दामा आउनेछ ।

जबकि दृश्यम:३ मलयालमको प्रारम्भिक रिलिज हिन्दी संस्करणको लागी चिन्ताजनक नहुन सक्छ किनकि यसपटक दुवैको कथा फरक रहेका छन् । तर, यदि निर्माताहरूले यसलाई डब गरिएको हिन्दी संस्करणमा रिलिज गर्ने निर्णय गरे भने यो पहिलेको लागि ठूलो फाइदा साबित हुन सक्छ।

निस्सन्देह फिल्मको लागि हिन्दी दर्शकहरूमा ठूलो अपेक्षा रहेको छ । यसअघिएकैसाथ सुटिङ हुने खबर आएको थियो तर अब त्यस्तो देखिँदैन्, उसो भए यो फिल्म अब कसरी अगाडि बढ्छ भन्ने कुरा हेर्नु आवश्यक छ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ४१ ने.सं. ११४५ तछलागा आमै असार ११ गते बुधबार, २०८२ 25 June 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## सुशासनको प्रतिबद्धता खोक्रो बन्दै : संसद् अवरुद्ध कायमै

# भिजिट भिसा प्रकरण: छानबिन समितिमाथि गम्भीर प्रश्न




काठमाडौं । प्रतिनिधिसभाको चालु वर्षे अधिवेशन स्वतःस्फूर्त रूपमा गत जेठ महिनादेखि सञ्चालन हुन सकेको छैन। यसको प्रमुख कारण संसदका दुई ठूला दल–नेपाली कांग्रेस र नेकपा (एमाले)–को आआफ्नै प्रतिबद्धता विपरीतको आचरण र गम्भीर विषयहरूमा पनि उदासीनता हो।

सुशासन, पारदर्शिता र भ्रष्टाचारविरुद्धको प्रतिबद्धता सत्ता गठबन्धनका प्रमुख दलहरूले जनतालाई दिएको थिए। तर सरकार गठन भएको १६ महिनासम्म पनि ती प्रतिबद्धता कार्यान्वयन हुन सकेका छैनन्। बरु, विभिन्न भ्रष्टाचार प्रकरणमा सत्ता पक्षका मन्त्रीहरू र नेताहरूको संलग्नता खुलेर बाहिरिएको छ। यसले सुशासन होइन, कुशासन र भ्रष्टाचारको शासन कायम भइरहेको स्पष्ट देखिन्छ।

अर्कोतर्फ, संसदमा प्रस्तुत विधेयकहरू–जसमा वार्षिक बजेटदेखि संघीय शिक्षा विधेयक, निजामती सेवा विधेयकजस्ता महत्वपूर्ण दस्तावेजहरू छन्–माथि आवश्यक छलफल हुन सकेको छैन। प्रतिपक्षी दलहरू विशेषगरी रास्वपा र राप्रपाले निरन्तर संसद अवरुद्ध गरिरहेका छन्। उनीहरूले त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा भएको सुन तस्करी प्रकरणमा गृहमन्त्रीको संलग्नता भएको आरोप लगाउँदै उच्चस्तरीय छानबिन आयोग गठनको माग गरिरहेका छन्।

सभामुख देवराज घिमिरेले प्रतिपक्षीको अवरोधबीच पनि संसद सञ्चालन गर्न प्रयासरत देखिए पनि सांसदहरूको उपस्थिति कमजोर र कार्यसूचीहरू पूर्ण रूपमा अगाडि बढ्न सकेका छैनन्। महत्वपूर्ण विधेयकहरू पारित गरिनुपर्ने बेलामा राजनीतिक अदूरदर्शिता र आपसी अविश्वासले संसदको भूमिका नै कमजोर बनाइरहेको छ।

जनताको चाहना सुशासन र विकासप्रति केन्द्रित भए पनि, वर्तमान राजनीतिक नेतृत्वले त्यसलाई वेवास्ता गर्दै केवल सत्ताको दाउपेचमा समय खर्चिरहेको स्पष्ट देखिन्छ। संसद चल्न नसक्नु, नीतिगत निर्णय ठप्प हुनु, र भ्रष्टाचारमा नेताहरूको संलग्नता हुनु लोकतन्त्रकै उपहास हो।

गृह मन्त्रालयले मानव तस्करीसँग जोडिएको भिजिट भिसा प्रकरणको छानबिनका लागि गठन गरेको उच्चस्तरीय समितिमाथि सुरुमै प्रश्न उठेको छ। विशेषगरी, स्वार्थ बाझिएको देखिएकाले छानबिन निष्पक्ष नहुने आशंका गरिएको छ।

उच्चस्तरीय समितिमा गृह मन्त्रालयकै अधिकारीहरू समावेश गरिएकाले यसको वैधानिकतामाथि नै प्रश्न उठेको छ। गृह मन्त्रालयले नै प्रस्ताव गरेको, गृहमन्त्री र गृहसचिवमाथि छानबिन हुनुपर्ने अवस्थामा तिनै गृहसचिव छानबिन समितिमा सदस्यसचिवको रूपमा रहेका छन्। यो अवस्थालाई "चोरलाई चाबी बुझाए जस्तै" भन्दै टिप्पणी गरिएको छ, जसले सरकारले छानबिनको नाटक मात्र मञ्चन गरेको प्रस्ट पारेको छ।

श्रम, परराष्ट्र र पर्यटन मन्त्रालयका प्रतिनिधिहरू पनि समितिमा छन्, जबकि यी तीनवटै मन्त्रालय पनि भिजिट भिसा प्रकरणसँग प्रत्यक्ष जोडिएका छन्। यसले स्वार्थको द्वन्द्व अझ बढाएको छ।

गत जेठ ७ गतेबाट सतहमा आएको यो प्रकरणमा विपक्षी दलहरूले संसदमा प्रश्न उठाएका थिए। तर, सोमबार समिति गठन भएर मंगलबार संसदसम्म आइपुग्दा प्रमुख प्रतिपक्षी दल नेकपा माओवादीले सत्ता पक्षसँग राजनीतिक लेनदेन गरेको चर्चा चलेको छ।

यस प्रकरणको नेतृत्व सुरुमा माओवादीले नै गरेको थियो। तर, माओवादीका उपाध्यक्ष अग्नि सापकोटा जोडिएको अर्जुन लामा हत्या प्रकरणमा सर्वोच्च अदालतले छानबिन प्रक्रिया अगाडि बढाउन आदेश दिएपछि माओवादी पछि हटेको र सरकारसँग दुई बुँदे सहमति गरेर संसद अवरोध खुलाउन राजी भएको बताइएको छ। यो सहमति सापकोटामाथि प्रहरी छानबिन अगाडि नबढाउने सर्तमा भएको कुरा अब प्रष्ट भएको स्रोतको भनाइ छ।

अध्यागमन र भिजिट भिसाको सम्बन्धमा विगतदेखि देखिएका समस्या समाधान गर्ने सम्बन्धी उच्चस्तरीय अध्ययन एवं छानबिन समिति, २०८२ मा पूर्व मुख्यसचिव शंकरदास वैरागी अध्यक्ष छन्। सदस्यहरूमा अर्थ, कानुन, पर्यटन, परराष्ट्र, श्रम र गृह मन्त्रालयका सहसचिवहरू छन्, जसमा गृह मन्त्रालयका सहसचिव आनन्द काफ्ले सदस्यसचिव छन्।

समितिको कार्यक्षेत्रमा नीतिगत, कानुनी, र संरचनागत सुधारका तत्कालीन र दीर्घकालीन कार्ययोजना प्रस्ताव गर्ने, प्रचलित ऐन, नियमावली, कार्यविधि, मापदण्डमा संशोधनको सुझाव दिने, कर्मचारी व्यवस्थापनमा सुधारका प्रस्ताव गर्ने, सम्बन्धित निकायहरूबीचको समन्वय सुधार गर्ने, अन्तर्राष्ट्रिय असल अभ्यासको अध्ययन गर्ने, विदेशमा अवैध रुपमा बस्दा उत्पन्न हुने समस्याको रोकथामका उपाय सुझाउने, अध्यागमन प्रणालीलाई प्रविधिमैत्री बनाउने, सरोकारवाला निकायको भूमिका व्यवस्थित गर्ने, र अभिलेख सुरक्षित राख्ने लगायतका बुँदाहरू समेटिएका छन्।

बाँकी पेज ७ मा

## ओली सरकार बिचौलियामुखी, समर्थन फिर्ता लिँदैछौं: अध्यक्ष यादव




भक्तपुर, असार ९ – जनता समाजवादी पार्टी (जसपा) का अध्यक्ष उपेन्द्र यादवले सरकारप्रति तीव्र असन्तुष्टि जनाउँदै गठबन्धन सरकारलाई दिएको समर्थन फिर्ता लिएको घोषणा गरेका छन्। भक्तपुरमा आयोजित अन्तरसंवाद कार्यक्रममा बोल्दै अध्यक्ष यादवले वर्तमान सरकार जनतामुखी नभई बिचौलियामुखी भएको आरोप लगाए।

"यो सरकार सुधारको होइन, विनाशको स्क्रिप्टमा चलेको छ," उनले भने, "हामीले समर्थन दिँदैमा सरकार सुध्रिन्छ भन्ने भ्रम राख्न जरुरी छैन।"

यादवले सत्तारुढ एमाले-कांग्रेस गठबन्धनलाई म्युजिकल चियरको खेलको संज्ञा दिँदै सरकार गठनको बेला गरिएका सुशासन, भ्रष्टाचार अन्त्य, र आर्थिक सुधारका प्रतिबद्धता सबै झूटो सावित भएको टिप्पणी गरे।

बाँकी पेज ७ मा

## दुई ब्यानर, एउटै मेला : भक्तपुर उद्योग वाणिज्य संघको कार्यक्रममा बजेट दुरुपयोगको आशंका




भक्तपुर । भक्तपुर उद्योग वाणिज्य सङ्घमाथि किर्ते काम गरी सरकारी बजेट दुरुपयोग गरेको गम्भीर आरोप लागेको छ । आरोप अनुसार, यस कार्यमा नेपाल मजदुर किसान पार्टी (नेमकिपा) का सांसदहरू समेत साक्षी बसेका छन् ।

घटनाक्रम अनुसार, भक्तपुर उद्योग वाणिज्य सङ्घले उद्योग तथा वाणिज्य कार्यालय भक्तपुरको सहकार्यमा असार ६ देखि ८ गतेसम्म भक्तपुर नगरपालिका वडा नम्बर १० स्थित स्टार बैङ्क्वेट कमलविनायकमा "भक्तपुर औद्योगिक प्रवर्धन व्यापार मेला" आयोजना गरेको थियो । यो मेला असार ६ गते बिहान १० बजेदेखि ८ गते साँझ ६ बजेसम्म चल्ने गरी प्रचार गरिएको थियो । मेलाको उद्घाटन नेमकिपाका जिल्ला अध्यक्ष तथा बागमती प्रदेश सभा सदस्य सुरेन्द्रराज गोसाईंले गरेको थियो ।

बाँकी पेज ७ मा

## मध्यपुर थिमि नगरपालिकाको १२ औं नगर सभामा ३ अर्ब २५ करोडको अनुमानित बजेट प्रस्तुत




मध्यपुर थिमि नगरपालिकाले आर्थिक वर्ष २०८२/०८३ का लागि कुल रु. १ अर्ब ५२ करोड ८३ हजार ५ सयको अनुमानित बजेट प्रस्तुत गरेको छ। नगरपालिकाको १२ औं नगर सभामा उपप्रमुख विजय कृष्ण श्रेष्ठले सोमबार उक्त बजेट वक्तव्य प्रस्तुत गरेका हुन्। यस बजेटमा पुँजीगततर्फ ५१.१६ प्रतिशत (रु. ७७ करोड ७७ लाख २८ हजार ५ सय) र चालुतर्फ ४८.८४ प्रतिशत (रु. ७४ करोड २३ लाख ५५ हजार) विनियोजन गरिएको छ।

बजेटका मुख्य स्रोतहरू

बजेटका लागि आन्तरिक आयबाट रु. ३७ करोड २४ लाख ५७ हजार ९ सय उनान्अस्सी, राजस्व बाँडफाँडबाट रु. ४० करोड १३ लाख ७५ हजार ५ सय एकाईस, संघीय सरकारबाट रु. ६० करोड ५३ लाख र बागमती प्रदेश सरकारबाट रु. ७ करोड ९ लाख ५० हजार अनुदान प्राप्त हुने अनुमान गरिएको छ। यसका अतिरिक्त, लागत सहभागिताबाट रु. १ करोड र बैंक मौज्दात रु. ६ करोड रहने प्रक्षेपण गरिएको छ।

प्रमुख क्षेत्रमा विनियोजित बजेट

सुशासन तथा अन्तर सम्बन्धित क्षेत्र: यस क्षेत्रमा रु. ३ करोड ३० लाख ८७ हजार विनियोजन गरिएको छ, जसमा वातावरण तथा जलवायु, विपद् व्यवस्थापन, मानव संसाधन विकास, शान्ति तथा सुव्यवस्था, कानुन तथा न्याय, शासन प्रणाली, तथ्याङ्क प्रणाली, गरिबी निवारण, श्रम तथा रोजगारी, योजना तर्जुमा र कार्यान्वयन, अनुगमन तथा मूल्याङ्कन, प्रशासकीय सुशासन, वित्तीय सुशासन जस्ता विषयहरू समेटिएका छन्।

सामाजिक विकास: शिक्षा, स्वास्थ्य, खानेपानी तथा सरसफाइ, भाषा तथा संस्कृति, लैङ्गिक समानता तथा सामाजिक समावेशीकरण, युवा तथा खेलकुद, सामाजिक सुरक्षा तथा संरक्षण लगायतका क्षेत्रमा रु. ५१ करोड ३१ लाख ७९ हजार विनियोजन गरिएको छ।

आर्थिक विकास: कृषि, उद्योग, पर्यटन, सहकारी, वित्तीय क्षेत्र, जलस्रोत तथा सिँचाइ, वन, पशुपन्छी, भूमि व्यवस्था र आपूर्ति क्षेत्रको विकासका लागि रु. ६ करोड ४९ लाख २७ हजार विनियोजन गरिएको छ।

पूर्वाधार विकास: यातायात पूर्वाधार, भवन, आवास तथा सहरी विकास, ऊर्जा, सञ्चार तथा सूचना प्रविधि, सम्पदा पूर्वाधार, विज्ञान तथा प्रविधि, पुनर्निर्माण लगायतका लागि रु. ६७ करोड ५५ लाख ५५ हजार ५ सय विनियोजन गरिएको

बाँकी पेज ७ मा

## चाँगुनारायणको नीति तथा कार्यक्रम : कृषि, पर्यटन र पूर्वाधारलाई समृद्धिको मूल आधार बनाइने

चाँगुनारायण। चाँगुनारायण नगरपालिकाले आगामी आर्थिक वर्ष २०८२/०८३ का लागि नगरप्रमुख जीवन खत्रीले वार्षिक नीति तथा कार्यक्रम प्रस्तुत गरेको छन् । मंगलबार सुरु भएको नगरसभाको सत्रौं अधिवेशनमा "कृषि, पर्यटन र सामाजिक पूर्वाधार: समृद्ध चाँगुनारायणको मूल आधार" भन्ने दीर्घकालीन सोचलाई साकार पार्ने गरी महत्वाकांक्षी कार्यक्रमहरू सार्वजनिक गरिएको हो ।

नगरपालिकाले "सबल स्थानीय सरकार: समुन्नत टोल, समुन्नत नगर" को नारालाई व्यवहारमा उतार्न उपलब्ध स्रोतसाधनको अधिकतम उपयोग गर्दै दिगो विकास, सुशासन र वित्तीय अनुशासनमा जोड दिने नीति लिएको छ ।

नगरकोट भ्रमण वर्ष र




पर्यटन प्रवर्द्धनमा जोड

आगामी वर्षलाई "नगरकोट भ्रमण वर्ष २०८२" को रूपमा मनाउने घोषणा गर्दै नगरपालिकाले पर्यटनलाई आय र रोजगारीको प्रमुख स्रोत बनाउने नीति अघि सारेको छ । यसका लागि मौलिकता र नवप्रवर्तनमा आधारित साहित्यिक तथा शैक्षिक महोत्सवहरू सञ्चालन गरिनेछ । साथै, नगरभित्रका ऐतिहासिक, पुरातात्विक र सांस्कृतिक सम्पदाहरूको संरक्षण गरी पर्यटकीय गन्तव्यको रूपमा विकास गरिनेछ । नगरकोट पुग्ने मुख्य सडक निर्माण कार्यलाई आगामी आर्थिक वर्षभित्रै सम्पन्न गर्ने लक्ष्य राखिएको छ ।

कृषिमा आधुनिकीकरण र पूर्वाधार विकासलाई प्राथमिकता

नीति तथा कार्यक्रममा निर्वाहमुखी कृषिलाई आधुनिक र व्यावसायिक बनाउने विषयलाई उच्च प्राथमिकता दिइएको छ । कृषकको मागअनुसार साझेदारीमा उपकरण तथा बीउबिजनमा सहयोग गर्ने, रैथाने बालीलाई प्रोत्साहन गर्ने

बाँकी पेज ७ मा

# “तलेजु हार” फिर्तीमा अमेरिकी चार प्रश्न: स्वामित्व र बिक्रीबारे प्रमाण खोज्दै होमल्यान्ड सेक्युरिटी




काठमाडौं । सिकागोस्थित एक अमेरिकी संग्रहालयमा चार वर्षअघि भेटिएको तलेजु भवानीको ऐतिहासिक ‘कण्ठीहार’ (तलेजु हार) नेपाल फर्काउने प्रक्रियामा अमेरिकी गृह मन्त्रालयअन्तर्गतको होमल्यान्ड सेक्युरिटीले नयाँ शर्तसहित चार प्रश्न उठाएको छ ।

डिपार्टमेन्ट अफ होमल्यान्ड सेक्युरिटीको अध्यागमन तथा भन्सार प्रवर्तन निकाय (आईसीई)ले तलेजु हारको स्वामित्व, उत्पत्ति, बिक्री प्रक्रिया र नेपाली कानुनी आधारबारे पुरातत्त्व विभागसँग लिखित जवाफ मागेको हो ।

आईसीईका अनुसन्धानकर्ताहरूले गत मंसिर २६ मा काठमाडौं आएर पुरातत्त्व विभागका पदाधिकारीसँग प्रत्यक्ष छलफल गरेका थिए । त्यसपछि चैत ५ र वैशाख १ गते दुईपटक पत्राचार गर्दै औपचारिक रूपमा चार बुँदे जिज्ञासा राखिएको हो ।

आईसीईले भनेको छ, “यदि यो कण्ठीहार मुलचोकबाट चोरेर अमेरिका पुगेको हो भने त्यसको स्पष्ट प्रमाण चाहिन्छ । नेपालका राजपरिवारलाई यस्तो ऐतिहासिक सम्पदा बेच्ने अधिकार छ वा छैन भन्ने समेत प्रस्ट हुनुपर्छ ।”

राजपरिवारसँग सम्बन्धित विषयमा नेपाली कानुनअनुसार बिक्री वा उपहार दिने अधिकार छैन भन्ने प्रमाणसहितको कानुनी प्रतिलिपि पनि माग गरिएको छ । साथै, अमेरिकी कला व्यापारी ब्रुस मिलरसँग हार बिक्री सम्बन्धी प्रमाणहरू पनि आवश्यक पर्ने उल्लेख गरिएको छ ।

यस विषयमा पुरातत्त्व विभागकी महानिर्देशक सौभाग्य प्रधानाङ्गले विभागले आवश्यक कागजात, ऐतिहासिक लगत र प्रमाणहरू पठाइसकेको जानकारी दिइन् । तर, राजपरिवारको स्वामित्वको प्रश्नमा भने उत्तर दिनु उपयुक्त नभएको धारणा व्यक्त गरिन् ।

उनले भनिन्, “राज्यको सम्पत्ति कसैले व्यक्तिगत रूपमा उपहार दिएको भए पनि त्यो गैरकानुनी हो । हाम्रो तर्फबाट उत्पत्तिको प्रमाण पर्याप्त छन् । बाँकी कुरा दुई देशबीचको कूटनीतिक संवादमा निर्भर रहन्छ ।”

ऐतिहासिक प्रमाण र विवाद

तलेजु हारको प्रामाणिकता पुष्टि गर्ने प्रमाणस्वरूप हालै १०० वर्ष पुरानो ‘प्रताप मल्ल लगत’ फेला परेको छ । उक्त दस्तावेजमा चाँदीका पातमा सुनका मलम्बा, मोतीको घेरा, अष्टमात्रिका मूर्ति, र ‘राजेन्द्रप्रताप मल्ल’ नाम उल्लेख भएको कण्ठीहारको विवरण छ ।

यही हार २०२६ सालतिर दरबारबाट बनाइएको विशेष समितिले खोज्दा फेला नपरेको विवरण छ । पछि सन् १९७६ मा अमेरिकी दम्पती जेम्स डब्लु एल्सडर्फ र मार्लिन ब्रुडर एल्सडर्फले अमेरिकी व्यापारी ब्रुस मिलरमार्फत हार खरिद गरेको र सन् २०१० मा सिकागो म्युजियमलाई प्रदान गरेको म्युजियमको कागजातमा उल्लेख छ ।

तर यो हार अमेरिका कसरी पुगेको, कहिले र कति मूल्यमा बिक्री भएको भन्नेबारे म्युजियम वा सम्बन्धित पक्षसँग स्पष्ट विवरण छैन ।

चासो र बहस

२०७८ जेठमा अमेरिकामा रहेकी पत्रकार श्वेताज्ञानु बानियाँले तलेजु हारको तस्वीरसहितको जानकारी सार्वजनिक गरेपछि यो विषय फेरि चर्चामा आएको हो । संयोगवश, सिकागो म्युजियमले एल्सडर्फ दम्पतीले नै दिएको अर्को सम्पदा–चुर्तुमुखी शिवलिंग भने नेपाल फर्काएको थियो । तर तलेजु हारबारे भने म्युजियम मौन छ ।

पुरातत्त्व विभागकी अधिकृत सरिता सुवेदी भन्छिन्, “तथ्य र प्रमाण पुगिसकेका छन् । अहिले आएका केही सतही जिज्ञासालाई लिएर निरन्तर पत्राचार हुँदैछ ।”

सम्पदा संरक्षणकर्मी आलोकसिद्धी तुलाधार भन्छन्, “राजा प्रताप मल्ल र नेपालको नामै उल्लेख भएको ऐतिहासिक कृतिमा अब उत्पत्तिको पुष्टि खोज्नु अनावश्यक छ । बरु परराष्ट्र मन्त्रालय र अमेरिकास्थित नेपाली दूतावासले सक्रियता बढाउनुपर्छ ।”

तलेजु हारको फिर्तीका लागि हाल काठमाडौंमा चलिरहेको अन्तर्राष्ट्रिय सम्पदा पुनर्स्थापना सम्मेलनमा समेत यस विषयलाई विशेष प्राथमिकताका साथ उठाइएको छ ।

# ललितपुरमा उद्घोषण तथा प्रतिवेदन लेखन तालिम सम्पन्न, २८ महिला लाभान्वित

ललितपुर । ललितपुर महानगरपालिका वडा नम्बर १६ को आयोजनामा १५ दिने उद्घोषण र ३ दिने प्रस्तावना तथा प्रतिवेदन लेखन प्रशिक्षण कार्यक्रम सम्पन्न भएको छ । वडा कार्यालयले आयोजना गरेको यस तालिमबाट वडाका २८ जना महिलाहरु लाभान्वित भएका छन् ।

प्रशिक्षणको समापन समारोहमा बोल्दै वडा नम्बर १६ का अध्यक्ष निर्मलरत्न शाक्यले सहभागीहरुमा आएको उल्लेखनीय परिवर्तनले आफू उत्साहित भएको बताए । उनले सहभागीहरुलाई प्राप्त ज्ञान र सीपलाई व्यवहारमा उतार्न आग्रह गर्दै वडा कार्यालयले सधैं यस्ता रचनात्मक कार्यहरुमा साथ दिने प्रतिबद्धता व्यक्त गरे ।

वडा महिला सदस्य बबिता श्रेष्ठको सभापतित्वमा महिला समूहलाई लक्षित गरी आयोजना गरिएको यस तालिमले मनका कुरा उचित शैलीमा प्रस्तुत गर्न नसक्दा पछि परेका महिलाहरुलाई अगाडि बढाउन महत्वपूर्ण भूमिका खेलेको धारणा श्रेष्ठले राखे ।

उद्घोषण प्रशिक्षक सुरजवीर बज्राचार्यले १५ दिनअघि असम्भव लागेका कार्यहरुमा पनि सहभागीहरुले दक्षता हासिल गरेकोमा खुसी व्यक्त गर्दै लक्ष्य प्राप्तिका लागि अगाडि बढ्न मात्र आवश्यक रहेको बताए । त्यसैगरी, प्रस्तावना तथा प्रतिवेदन लेखन प्रशिक्षक सुमित्रा शाक्यले ३ दिने प्रशिक्षणबाट प्राप्त ज्ञानको सदुपयोग गर्न र स्थानीय तहको सहयोग प्राप्त गर्नका लागि राम्रो प्रस्तावना तथा प्रतिवेदन लेखनको महत्वमाथि प्रकाश पारेको थियो ।

समापन समारोहमा सहभागी प्रशिक्षार्थीहरुले नै कार्यक्रमको योजना, व्यवस्थापन, सञ्चालनका साथै स्वागत तथा धन्यवाद मन्तव्य प्रस्तुत गरेका थिए । रिले शैलीमा सञ्चालन गरिएको यस कार्यक्रमलाई श्रृष्टि शाक्य, रश्मी बज्राचार्य, सुमिका बज्राचार्य, रिनु श्रेष्ठ शाक्य, रमिता बज्राचार्य, रश्मिला बज्राचार्य, श्रृष्मा बज्राचार्य र मन्दिरा शाक्यले सञ्चालन गरेका थिए । शारदा शाक्यले स्वागत मन्तव्य राखेको थियो भने करुणा श्रेष्ठले धन्यवाद ज्ञापन गरेको थियो । प्रशिक्षणमा वीणा श्रेष्ठ, एइका शाक्य, रश्ना बज्राचार्य, सुनीता मुल्मी, रोशनी शाक्य, धन महर्जन, अञ्जना श्रेष्ठ, ज्ञानीशोभा बज्राचार्य, रुजेन शाक्य, सरीता महर्जन, रमिता शाक्य, करुणा बज्राचार्य, मीना शाक्य, सम्पदा शाक्य, रश्मिला बज्राचार्य, सुनीता बज्राचार्य, उषा लाखे, मोतिशोभा बज्राचार्य, शोभा महर्जन लगायतका प्रशिक्षार्थीहरुले तालिमको अनुभवबारे आफ्ना भनाईहरु राखेका थिए ।

प्रशिक्षक सुरजवीर बज्राचार्य र सुमित्रा शाक्यलाई कदरपत्र तथा मायाको चिनो प्रदान गरिनुका साथै सम्पूर्ण प्रशिक्षार्थीहरुलाई प्रमाणपत्र वितरण गरिएको थियो । ललितपुर महानगरपालिका वडा नम्बर १६ ले वडावासीको व्यक्तित्व विकासका लागि गर्दै आएका विभिन्न कार्यहरुका कारण यस वडालाई पृथक र नमूना वडाका रुपमा चिनिँदै आएको छ ।

# कीर्तिपुरमा सम्पदा अवलोकन कार्यक्रम सम्पन्न



काठमाडौं । नेपालभाषा एकेदेमि र कीर्तिपुर नगरपालिकाको सहकार्यमा शनिबार कीर्तिपुरमा ‘सम्पदा अवलोकन पदयात्रा’ कार्यक्रम सम्पन्न भएको छ । शुक्रबार र शनिबार गरी दुई दिन ‘झिगु सम्पदा, झिगु साहित्य’ (हाम्रो सम्पदा, हाम्रो साहित्य) भन्ने नारासहित आयोजना गरिएको कार्यक्रममा काठमाडौं, भक्तपुर, ललितपुरलगायत विभिन्न जिल्लाका साहित्यिक व्यक्तित्वहरूको उल्लेखिय सहभागिता रहेको थियो ।

कार्यक्रम कीर्तिपुर नगरपालिकाको मुख्य प्रवेशद्वार (मुध्वाका) बाट सुरु भई ऐतिहासिक तथा धार्मिक स्थलहरूको अवलोकन गर्दै सम्पन्न भएको थियो । महानगरपालिकाको सामाजिक विकास विभाग प्रमुख अनुज प्रधानको नेतृत्वमा सुरु भएको पदयात्राले चिलिन्चो बिहार (जगत्पाल महाविहार), बाघभैरव, द्योपुखु, उमा-महेश्वर, मिसा पाया, याक: मिसा, इन्द्रायणी र द्योद्वाखालगायतका सम्पदा स्थलहरूको अवलोकन भ्रमण गरेको थियो ।

सम्पदाको अध्ययन तथा अवलोकनको क्रममा डा. बज्रमुनि बज्राचार्य र प्रयागमान प्रधानले सहजकर्ताको भूमिका निर्वाह गरेका थिए । नेपालभाषा एकेदेमिका महासचिव महेन्द्र गोपाल कर्माचार्यले सम्पदाको अवलोकनबाट साहित्यिक प्रेरणा लिई नेपालभाषा र साहित्यको विकास गर्न सकिने बताए । कार्यक्रमको अन्त्यमा साहित्कार हरुबाट सम्पदा अवलोकन, अध्ययन भ्रमण पश्चात सोही विषयको अभिलेखीकरण गर्ने उद्देश्यसहित सिर्जना गरिएका साहित्य नेपालभाषा एकेदेमिको सभाहलमा आयोजित कार्यक्रममा बाचन गरेका थिए ।

# खुट्टाले लेखिएको पुस्तक “अविचलित पाइला” सार्वजनिक

भक्तपुर । मस्तिष्क पक्षघातका कारण दुवै हात नचल्ने अवस्थामा रहेकी भक्तपुर नगरपालिका-३ तेखापुखू निवासी प्रिता बल्लले खुट्टाको सहायताबाट लेखेकी पुस्तक ‘अविचलित पाइला’ को सार्वजनिक विमोचन सम्पन्न भएको छ । संस्कृति, पर्यटन तथा नागरिक उड्डयनमन्त्री बद्रीप्रसाद पाण्डेले आज भक्तपुरमा आयोजित विशेष समारोहका बीच उक्त पुस्तक लोकार्पण गरेका छन् ।

अनुशीलन नेपालको २० औं प्रकाशनका रूपमा प्रकाशित यो कृति दुई खण्डमा विभाजित छ । पहिलो खण्डमा प्रिताका जीवन अनुभव, भ्रमण संस्मरण, सामाजिक-सांस्कृतिक टिप्पणीसहितका ९३ वटा रचना छन् भने दोस्रो खण्डमा विभिन्न लेखक तथा आफन्तले प्रिताबारे लेखेका १५ वटा लेख समावेश छन् । २४२ पृष्ठको पुस्तक मोबाइलमा खुट्टाको सहायताले टाइप गरेर तयार पारिएको हो, जसलाई जीवनाथ अधिकारीले सम्पादन गरेको छ ।

प्रमुख अतिथि मन्त्री पाण्डेले मन्तव्य दिँदै भने, “शारीरिक अपाङ्गता कमजोरी होइन । प्रिताको कृतिले बौद्धिक सबलता र दृढ इच्छाशक्तिले कुनै पनि कठिनाइलाई जित्न सकिन्छ भन्ने सन्देश दिएको छ ।” उनले प्रितालाई पर्यटन मन्त्रालयमा महत्वपूर्ण जिम्मेवारी दिने प्रतिवद्धता समेत जनाए । कार्यक्रममा संघीय सांसद दुर्लभ थापा, सम्पादक जीवनाथ अधिकारी, शिक्षाविद् प्रकाशकुमार श्रेष्ठ, रामगोपाल कर्माचार्य, भक्तराज भण्डारी, नारायणप्रसाद झा र रामेश्वर वाग्लेलगायत वक्ताहरूले प्रिताको लेखन, धैर्य र आत्मबलको प्रशंसा गर्दै शुभकामना व्यक्त गरे । कार्यक्रमका क्रममा सन्दीप बल्लले लेखकको जीवनी तथा संघर्षको बारेमा जानकारी गराएको थियो भने ध्रुवप्रसाद बल्लले स्वागत मन्तव्य दिएको थियो ।

‘अविचलित पाइला’ को प्रकाशन व्यवस्थापन २०४१ परवेशिका समूह, श्री पद्म माध्यमिक विद्यालय, भक्तपुरले गरेको हो । सभाको अध्यक्षता लेखककी पिता पवन बल्लले गरेको थियो भने सञ्चालन निष्ठा बल्लले गरेको थियो । यो प्रेरणादायी कृति प्रिताको जीवन संघर्ष, पर्यटन अनुभव तथा सांस्कृतिक धरोहरप्रतिको प्रेमको दस्तावेज हो, जुन भविष्यमा अझ व्यापक प्रेरणाको स्रोत बन्ने विश्वास गरिएको छ ।

# विनायक शिक्षामा व: फेस्टिवल सम्पन्न



मध्यपुर थिमि । स्थानीय पाठ्यक्रमको उद्देश्य पूरा गर्दै विद्यार्थीहरूलाई रैथाने संस्कृति र खानाको महत्वबारे अवगत गराउने उद्देश्यले विनायक शिक्षा निकेतनले ‘व: फेस्टिवल’ सफलतापूर्वक सम्पन्न गरेको छ ।

विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्र विक्रम प्रजापतिका अनुसार, यो कार्यक्रम केही वर्षदेखि निरन्तर रूपमा आयोजना हुँदै आएको छ । “बजारिया खानेकुराभन्दा आफ्नै मौलिक परिकारहरूलाई प्राथमिकता दिँदै विद्यालयमा खाजाको रूपमा समावेश गर्न विद्यार्थीहरूलाई प्रोत्साहित गरिएको हो,” उनले बताए ।

फेस्टिवलको क्रममा विद्यार्थीहरूले आफ्नै घरमा तयार पारेका व:, चटामरी तथा अन्य परम्परागत परिकारहरू बिक्रीका लागि ल्याएका थिए । विद्यालय परिसरमै स्टलहरू राखी ती सामग्रीहरू शिक्षक, अभिभावक, आगन्तुक र अतिथि महानुभावहरूलाई बिक्री गरिएको थियो । केही विद्यार्थी समूहले विद्यालयमै ती परिकारहरू तयार पारी सेवा प्रदान गरेका थिए ।

यसका साथै, कार्यक्रममा दुई हप्ता अघिदेखि विद्यालयमा कार्यरत नेशनल ताइवान युनिभर्सिटीका स्वयंसेवक शिक्षकहरूको विदाई कार्यक्रमसमेत गरिएको थियो । ताइवानी स्वयंसेवकहरूले विद्यार्थीहरूलाई चिनियाँ भाषा, संस्कृति, विज्ञान र प्रविधिसम्बन्धी ज्ञान प्रदान गरेका थिए ।

उनीहरूको योगदानप्रति कृतज्ञता व्यक्त गर्दै विद्यालयका प्रिन्सिपल प्रजापतिले खादा र मायाको चिनो प्रदान गर्दै धन्यवाद ज्ञापन गरेको थियो । विदाई समारोहमा विनायकका विद्यार्थीहरूले परम्परागत अष्टमात्रिका नाचसहित विभिन्न सांस्कृतिक प्रस्तुति गरिएका थिए । त्यस्तै, ताइवानबाट आएका स्वयंसेवक शिक्षकहरूले पनि आफ्ना मौलिक नृत्य र गायन प्रस्तुत गरेर दर्शकहरूलाई मन्त्रमुग्ध बनाएका थिए ।

स्वयंसेवक समूहकी टोली नेतृ जेनिफरले नेशनल ताइवान युनिभर्सिटी र विनायक शिक्षा निकेतनबीचको सहकार्य विगत १० वर्षदेखि निरन्तर चलिरहेको जानकारी दिँदै आगामी दिनमा पनि यो कार्यक्रमलाई निरन्तरता दिइने बताए ।

# नेपालमै उत्पादन हुँदै विद्युतीय स्कुटर, बजारमा कहिले ?




काठमाडौँ । सिप्रदी ट्रेडिङ र यात्री मोटरसाइकल्सको सहकार्यमा नेपालको पहिलो स्वदेशमै निर्मित इलेक्ट्रिक स्कुटर 'पी-२' (ए-२) सार्वजनिक हुने तयारीमा रहेको छ। लामो समयदेखि विकासको क्रममा रहेको यो परियोजनाले हालै आन्तरिक डिजाइन प्रस्तुति (पी-२ डिजाइन प्रेजेन्टेसन) सम्पन्न गरेको छ र अब प्रमाणीकरण प्रक्रियामा जाने तयारी भइरहेको जनाएको छ ।

'मेड इन नेपाल' को ब्याचसहित तयार गरिने पी-२ स्कुटरले स्वदेशी उत्पादन, नवप्रवर्तन र विद्युतीय सवारी साधन (ई-मोबिलिटी) को क्षेत्रमा नयाँ उपलब्धि हासिल गर्ने लक्ष्य लिएको छ । स्कुटरको टिजर सार्वजनिक गर्दै यात्रीले यसको डिजाइन र निर्माणप्रति दृढ विश्वास व्यक्त गरेको छ ।

पी-२ मा मिड-माउन्ट मोटर, ट्युबलेस अलोय ह्विल, अगाडि र पछाडि दुवै पाङ्गामा डिस्क ब्रेक, साथै आकर्षक स्पोर्टी लुक दिने शार्प एज डिजाइन जडान गरिएको छ । कम्पनीले स्कुटरको पाइलट उत्पादन यही वर्षको अन्त्यसम्म सुरु गर्ने योजना बनाएको जनाएको छ।

पहिले नै विद्युतीय मोटरसाइकल पी-१ मार्फत बजारमा सशक्त उपस्थिति जनाइसकेको यात्री मोटरसाइकल्सले सिप्रदी ट्रेडिङसँगको सहकार्यमा स्कुटर उत्पादनमार्फत स्वदेशी विद्युतीय सवारी उद्योगमा नयाँ अध्याय सुरु गर्न लागेको हो । यो साझेदारी अध्ययन, अनुसन्धान, डिजाइन, प्रोटोटाइप निर्माणदेखि उत्पादनसम्मका सबै चरणमा केन्द्रित छ ।

यसैबीच, कम्पनीले आफ्नो स्कुटरमा प्रयोग हुने ब्याट्रीको कार्यक्षमता परीक्षणलाई अझ सशक्त बनाएको छ । प्रयोगशालामा सीमित परीक्षणमात्र नगरी, कम्पनीले काठमाडौँ उपत्यका र दुर्गम पहाडी भेगहरूमा वास्तविक परिस्थितिमा स्कुटरको ब्याट्री परीक्षण गरिरहेको जनाएको छ । बुढानीलकण्ठ-टोखा-सूर्यचौर-छहरे-ढिकुरे जस्ता चुनौतीपूर्ण मार्गमा २०० किलोमिटरभन्दा बढी दूरी कभर गरी परीक्षण गरिएको कम्पनीले जानकारी दिएको छ ।

कम्पनीका अनुसार यस्ता परिक्षणहरूबाट केही सातामै १० हजार किलोमिटरभन्दा बढी दूरीको डेटा संकलन गरिनेछ, जसले ब्याट्रीको दीर्घकालीन कार्यसम्भावनाबारे महत्वपूर्ण जानकारी प्रदान गर्नेछ ।

# स्रष्टा पदयात्रा नेपालद्वारा चन्द्रागिरिमा ९५औं स्रष्टा पदयात्रा सम्पन्न



काठमाडौं – "स्वास्थ्य र सिर्जनाका लागि पदयात्रा" भन्ने नारासहित स्रष्टा पदयात्रा नेपालद्वारा आयोजित ९५औं पदयात्रा श्रृङ्खला चन्द्रागिरी क्षेत्रमा सम्पन्न भएको छ। सन् २०७३ सालदेखि प्रत्येक महिनाको पहिलो शनिबार आयोजना हुँदै आएको पदयात्राले यसपटक चन्द्रागिरिको गुर्जुधारा, किसिपिडी, मातातिर्थ र मच्छेगाउँ क्षेत्रलाई समेटेको थियो।

भाषा, साहित्य, संस्कृति र प्रकृतिसँगको सामीप्यता अभिवृद्धि गर्ने उद्देश्यले आयोजित पदयात्रामा उपत्यकाका विभिन्न क्षेत्रका करिब ५५ जना लेखक, कवि, साहित्यकार तथा पत्रकार सहभागी थिए। गुर्जुधारामा भेला भएको पदयात्री टोलीले प्राचीन नेवारी बस्ती किसिपिडी हुँदै चन्दनभराटेश्वर महादेव मन्दिर, मातातिर्थ कुण्ड, मच्छेनारायण मन्दिर र नारायण जन मावि हुँदै मुनाल क्लब तीनथाना सम्मको पदयात्रा सम्पन्न गरेका थिए।

किसिपिडीमा चन्द्रागिरि नगरपालिका-५ का वडाध्यक्ष राजेन्द्र महर्जनको अगुवाइमा पदयात्रा टोलीलाई परम्परागत नेवारी सगुन सहित स्वागत गरिएको थियो। सो अवसरमा स्रष्टा पदयात्राका महासचिव गङ्गाप्रसाद भेटवालले पदयात्राको निरन्तरता र महत्वबारे प्रकाश पारेका थिए। त्यस्तै, स्थानीय समाजसेवी विक्रम पाण्डेलाई सम्मान गरिएको थियो।

रचनावाचनको पहिलो चरण अनिता कोइराला र रुबी सत्यालले सुरु गरे भने टोलीले जनकल्याण पुस्तकालयलाई पुस्तक हस्तान्तरण पनि गर्‍यो। दोस्रो चरणमा चन्दनभराटेश्वर मन्दिर परिसरमा डा. वालचन्द्र मिश्रको संयोजनमा कविता वाचन गरिएको थियो। तेस्रो चरण गुमल गाउँस्थित जेष्ठ नागरिक सेवा केन्द्रमा सम्पन्न भयो जहाँ भोजनपछि साहित्यिक कार्यक्रम आयोजना गरिएको थियो।

मातातिर्थमा सम्पन्न कार्यक्रममा विद्यार्थीहरूको उत्साहजनक सहभागिता देखिएको थियो। ध्रुवराज थापाको संयोजनमा आयोजित कार्यक्रममा कवि तथा विद्यार्थीहरुले कविता, गीत र कथा प्रस्तुत गरे। यसक्रममा स्थानीय सामाजिक अभियन्ता ध्रुव बस्नेतलाई सम्मान गरियो।

पद्यात्राको अन्तिम चरण तीनथानास्थित मुनाल क्लबमा सम्पन्न भयो। चन्द्रागिरि साहित्य सरोवरद्वारा आयोजित कार्यक्रमका अध्यक्ष गोपीचन्द्र कार्की र सचिव कृष्णबहादुर कार्कीले सहभागी स्रष्टाहरुलाई स्वागत गरे। सरोवरका सदस्य घनश्याम भण्डारीको सहजीकरणमा सम्पन्न कार्यक्रममा पदयात्रा नेपालका उपाध्यक्ष विमल अर्याल र महासचिव भेटवालले संस्थाका गतिविधिबारे अवगत गराएका थिए।



# ट्रम्पको युद्धविराम घोषणाका बाबजुद तेहरानमा इजरायली आक्रमण जारी




तेहरान - मध्यपूर्वमा तनाव नाटकीय रूपमा चुलिएको छ। इरानले कतारमा रहेको अमेरिकी सैन्य अखडामा मिसाइल आक्रमण गरेपछि अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले इजरायल र इरानबीच युद्धविरामको घोषणा गरेका छन्। यद्यपि, युद्धविरामको घोषणाका बाबजुद इजरायलले तेहरानमा आक्रमण जारी राखेको अन्तर्राष्ट्रिय सञ्चारमाध्यमले जनाएका छन्, जसले गर्दा स्थिति थप जटिल र अनिश्चित बनेको छ।

आक्रमण र प्रतिशोधात्मक कारबाही

इरानको सरकारी समाचार एजेन्सी इर्नाले इस्लामिक रिभोलुसनरी गार्ड कर्प्स (आईआरजीसी) लाई उद्धृत गर्दै पुष्टि गरेअनुसार, गत साता अमेरिकाले इरानका प्रमुख आणविक केन्द्रहरूमा गरेको हवाई आक्रमणको प्रतिशोधस्वरूप यो हमला गरिएको हो। आईआरजीसीले जारी गरेको वक्तव्यमा कतारको अल उदैदस्थित अमेरिकी सैन्य बेसमा मिसाइल प्रहार गरिएको स्वीकार गरिएको छ। इरानले चेतावनी दिँदै भनेको छ, "यदि अमेरिका वा उसका सहयोगीहरूले फेरि कुनै आक्रामक कदम चालेमा इरानले अझै शक्तिशाली जवाफ दिनेछ।"

तर, आक्रमणको विवरणमा इरान र कतारबीच भिन्नता देखिएको छ। इरानले ६ वटा मिसाइल प्रहार भएको दाबी गरे पनि कतारले कुल १९ वटा मिसाइल प्रहार भएको जनाएको छ। कतारको रक्षा मन्त्रालयका अनुसार, तीमध्ये १८ वटा मिसाइललाई कतारी हवाई सुरक्षा प्रणालीले आकाशमै नष्ट गरिदिएको थियो भने एउटा मिसाइल मात्र बेसमा खसेको थियो। उक्त आक्रमणबाट कुनै मानवीय क्षति नभएको कतारको दाबी छ।

कतारको परराष्ट्र मन्त्रालयले यस आक्रमणलाई आफ्नो सार्वभौमिकता र हवाई क्षेत्रको उल्लंघन भन्दै भर्त्सना गरेको छ। दोहाले आवश्यक परेमा जवाफ दिने अधिकार सुरक्षित रहेको पनि स्पष्ट पारेको छ।

ट्रम्पको युद्धविराम घोषणा र तेहरानको वास्तविकता

कतारमा भएको आक्रमणलगत्तै अमेरिकी राष्ट्रपति डोनाल्ड ट्रम्पले एक अप्रत्याशित घोषणा गर्दै इजरायल र इरानबीच पूर्ण युद्धविरामको सहमति भएको बताए। यस घोषणाले जारी द्वन्द्व अन्त्य हुने आशा जगाएको थियो।

तर, ट्रम्पको घोषणाको केही समय नबित्दै तेहरानको आकाशमा विस्फोटका आवाजहरू सुनिन थालेका थिए। अलजजिराका अनुसार, युद्धविरामको घोषणाले तेहरानको अवस्थामा कुनै परिवर्तन ल्याएन, बरु इजरायली आक्रमण झनै तीव्र बन्यो। हमशाह्री र तासनिमजस्ता समाचार संस्थाहरूले पनि तेहरानको पश्चिमी र मध्य भागमा शक्तिशाली विस्फोट भएको र इरानी हवाई सुरक्षा प्रणालीले प्रतिकार गरिरहेको जनाएका छन्।

'थोपरिएको शान्ति' अस्वीकार्य: इरान

अमेरिकी राष्ट्रपतिको युद्धविराम घोषणाबारे तेहरानबाट कुनै आधिकारिक प्रतिक्रिया आएको छैन। तर, केही दिनअघि इरानका सर्वोच्च नेता आयतोल्ला अली खामेनीले एक भिडियो सन्देशमार्फत 'थोपरिएको शान्ति' आफूहरूलाई स्वीकार्य नहुने स्पष्ट पारेका थिए। यसले गर्दा ट्रम्प प्रशासनले अघि सारेको शान्ति प्रयासलाई इरानले कसरी हेर्छ भन्नेमा अनिश्चितता छाएको छ।

हालको परिस्थितिमा, एकातिर अमेरिकाले युद्धविरामको घोषणा गरेको छ भने अर्कोतिर इजरायल र इरानबीच आक्रमण-प्रत्याक्रमण जारी छ। यसले गर्दा मध्यपूर्वको संकट समाधान हुनुको साटो झनै गहिरिने जोखिम बढेको छ।

# इजरायली आक्रमणमा गाजामा सहायता कुरिरहेका २१ जनाको मृत्यु

तेहरान/गाजा - गाजाको नागरिक सुरक्षा एजेन्सीका अनुसार इजरायली सेनाले मङ्गलबार मध्य गाजास्थित एक वितरण केन्द्र नजिकै सहायता पर्खिरहेका नागरिकहरूलाई लक्षित गर्दै गरेको आक्रमणमा २१ जनाको मृत्यु भएको छ। घटनामा अन्य १५० भन्दा बढी घाइते भएका छन्।

नागरिक सुरक्षा प्रवक्ता महमुद बासलले बताएअनुसार मृतकहरू गाजाको केन्द्रमा राहत सामग्रीको आशामा भेला भएका थिए। यो सहायता लिन आएका सर्वसाधारणमाथि लक्षित पछिल्लो घातक कारबाही भएको बताइएको छ।

यसअघि मङ्गलबार बिहान गाजा सहरको एक घरमा भएको इजरायली हवाई आक्रमणमा पाँच जनाको मृत्यु भएको र कैयौँ घाइते भएका थिए।

गाजा पट्टीमा सञ्चारमाध्यममाथिको इजरायली प्रतिबन्ध र केही क्षेत्रहरूमा पहुँचको अभावका कारण उद्धारकर्मीहरू र स्थानीय अधिकारीहरूले दिएको तथ्याङ्कको स्वतन्त्र पुष्टि भने हुन सकेको छैन।

२० महिनादेखि जारी युद्धका कारण गाजामा व्यापक भोकमरी फैलिएको छ। दैनिक रूपमा हजारौँ प्यालेस्टिनी नागरिकहरू खाद्यान्न र राहतका लागि वितरण स्थलहरूमा भेला भइरहेका छन्।

हमासद्वारा सञ्चालित गाजाको स्वास्थ्य मन्त्रालयले दिएको तथ्याङ्कअनुसार, मे महिनाको अन्त्यदेखि राहतका क्रममा इजरायली आक्रमणमा परी कम्तीमा ४५० जनाको ज्यान गइसकेको छ भने करिब ३,५०० जना घाइते भएका छन्। तीमध्ये धेरै गाजा ह्युमेनिटेरियन फाउन्डेसनद्वारा सञ्चालित स्थानहरू नजिकै आक्रमणमा परेका थिए।

तर गाजामा निजी रूपमा सञ्चालित यी राहत केन्द्रहरूमा अराजकता देखिएको छ। संयुक्त राष्ट्रसंघका एजेन्सीहरू र अन्य प्रमुख अन्तर्राष्ट्रिय सहायता संस्थाहरूले इजरायली सैन्य रणनीतिसँग जोडिएको आशंकामा यी स्थानहरूसँग सहकार्य गर्न अस्वीकार गरेका छन्।

इजरायलले इरानसँग युद्धविरामको सहमति घोषणा गरेसँगै मङ्गलबार विपक्षी नेताहरूले गाजामा युद्ध अन्त्य गर्न सरकारलाई आह्वान गरेका छन्।

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### शंकाको घेरामा छानविन समिति

सरकारले प्रमुख प्रतिपक्षसँग भएको दुई बुँदे सहमति कार्यान्वयनको लागि भन्दै अध्यागमन प्रणालीमा देखिएको अनियमितता र भिजिट भिसामा भएका दुरुपयोगको अध्ययन गर्न उच्चस्तरीय छानबिन समिति गठन गरेको छ । तर, यो समिति गठन प्रक्रिया र संरचना मै प्रश्न खडा भएको छ । संसद्को अवरोध हटाउन गरिएको यो कदमले न त विश्वास पैदा गर्यो, न निष्पक्षताको अनुभूति गरायो । बरु, यसले सरकारको संकट व्यवस्थापन क्षमतामाथि अझ गम्भीर शंका उब्जाएको छ ।

गृह, श्रम, परराष्ट्र, संघीय मामिला मन्त्रालयका सहसचिवहरू तथा पूर्व मुख्य सचिवको संयोजकत्वमा बनेको समितिमा समस्या समाधानभन्दा पनि औपचारिकता पूरा गर्ने मात्र प्रयास भएको देखिन्छ । प्रशासनिक संयन्त्रमै लिप्त कर्मचारीहरूलाई समिति सदस्य बनाएर निष्पक्ष छानबिनको अपेक्षा गर्नु नै बेइमानी रहेको विज्ञहरुको भनाई छ । त्यसमाथि अख्तियार दुरुपयोग अनुसन्धान आयोगले भिजिट भिसासम्बन्धी अनियमिततामाथि पहिले नै छानबिन थालेको अवस्थामा सरकारले समानान्तर समिति बनाउनु संवैधानिक निकायको भूमिकामाथि हस्तक्षेपजस्तो देखिन्छ ।

संसद् अवरोधको अन्त्यका लागि गठन भएको भनिएको उक्त समिति न त विपक्षी दलका लागि स्वीकार्य बन्न सक्यो, न जनताका लागि आशाजनक । अझ स्पष्ट रूपमा भन्ने हो भने, समितिको संरचना नै पुरानै प्रशासनिक ढर्रामै आधारित छ । जसबाट समस्या 'सङ्कलन' त हुन सक्छ, समाधानका लागि प्रभावकारी सुझाव आउने अपेक्षा गर्न सकिँदैन ।

यदि सरकार साँच्चिकै यथार्थ र निष्पक्ष छानबिन गर्न चाहन्छ भने, पूर्व न्यायाधीशको अध्यक्षतामा न्यायिक समिति गठन गरिनुपर्छ । त्यसमै मानवशास्त्री, कानुनविद्, समाजशास्त्री र अर्थशास्त्रीजस्ता स्वतन्त्र विज्ञहरूको सहभागिता हुनुपर्छ, जसले समस्यालाई गहिरो रूपमा हेर्न सकून् र दीर्घकालीन समाधानको सुझाव दिन सकून् । सरकारले अहिले नै आफ्नो निर्णय पुनर्विचार गरेर छानबिनको स्वरूप बदल्न सक्यो भने, ढिलो भए पनि सही दिशा लिन सकिने सम्भावना अझै बाँकी छ । अन्यथा, यो अर्को "लाछी" निर्णयको रूपमा इतिहासमा दर्ज हुनेछ ।

# मामाचेली वा फुपूचेलीसँग बिहेबारीका असर

● अर्जुनध्वज अर्याल



ऐतिहासिक रूपमा जापानमा फूपुचेली विवाह प्रचलित थियो, तर अहिले कानूनी रूपमा मन्जुर छ। कानूनले प्रतिबन्ध लगाए पनि चीनका ग्रामीण वस्तीहरुमा मामाचेली विवाहको चलन अहिले पनि पाइन्छ।

पश्चिमा विकसित देशहरु भनेर चिनिने युरोप, अमेरिका, र अस्ट्रेलिया जस्ता देशहरुमा पनि यस प्रकारको विवाह प्रचलनमा रहेको पाइन्छ। युरोपका जर्मनी, फ्रान्स, र स्पेन जस्ता मुलुकमा क्रस-कजिन विवाह गैरकानूनी छैन । तर, सामाजिक रूपमा अस्वीकार्य बन्दै गैरहेको छ। बदलिँदो विश्व परिवेश र भूमण्डलीकरणका कारणले पनि यसप्रकारका विवाहमा विस्तारै अस्वीकार्यता बढदै गएको पाइन्छ।

अमेरिकाका ३१ वटा राज्यहरुमा फर्स्ट-कजिन विवाहमा प्रतिबन्ध नै लगाएको पाइन्छ बाँकी १९ वटा राज्यमा केही शर्तहरु जस्तै डाक्टरको स्वीकृति वा न्यायिक आदेश आदिका आाधारमा विवाहको अनुमति दिने गरेको छ।

मुख्य राज्यमा जेनेटिक काउन्सिलिङ गरेर मात्र विवाह गर्न अनुमति दिइन्छ भने एरिजोनामा ५० वर्षभन्दा माथिका मानिसले मात्रै यसप्रकारको विवाह अनुमति पाउँछन्। ४५ वर्ष माथि वा बाँझोपन प्रमाणित गरेमा इलिनोइस राज्यमा यस्तो विवाहका लागि अनुमति पाउँछन्।

यसखालको विवाहमा फ्लोरिडाले २०२३ मा कानूनी रुपमा प्रतिबन्ध लगाउने प्रस्ताव गरे पनि हालसम्म कानूनी रुपमा वैध नै मानिन्छ। उता अस्ट्रेलियाका धेरैजसो राज्यहरुमा क्रस-कजिन विवाह कानूनत वैध मानिन्छ ।

तथापि, पश्चिमी अस्ट्रेलियामा न्यायिक स्वीकृति आवश्यक पर्छ भने र भिक्टोरियामा जेनेटिक काउन्सिलिङ आवश्यक छ। सामाजिक रूपमा यो प्रथा अस्वीकार्य त होइन, तर धेरै प्रचलित पनि छैन। विशेषतः मुस्लिम समुदायमा समानान्तर कजिन विवाह प्रचलित रहेको पाइन्छ।

समानान्तर कजिन विवाह अर्थात बुबाको भाइकी/दाइकी छोरी वा आमाकी बहिनीकी/दिदीकी छोरीसँग गरिने विवाहलाई भनिन्छ। विशेष गरी मध्य पूर्व, उत्तरी अफ्रिका, र केही जनजातीय समुदायहरूमा प्रचलित छ। यो प्रथा धर्म, संस्कृति, र सामाजिक संरचनाअनुसार फरक छ।

समानान्तर कजिन विवाह विशेष गरी मुस्लिम अरब, पठान, र केही हिन्दु जातिहरूमा प्रचलित छ। साउदी अरब, यमन, जोर्डन, इराक, सिरिया, मिस्र जस्ता देशहरुमा बुबाको भाइकी/दाईकी छोरी (ँबतजभच'क द्यचयतजभच'क म्बगनजतभच - ँद्यम) सँग गरिने विवाहलाई 'इब्न अल-अम्म' भनिन्छ। यस प्रकारको विवाहबाट जन्मिने सन्तानहरुमा थ्यालेसिमिया, मानसिक विकलाङ्ग, र हृदय रोग आदिको खतरा भए पनि यो अरब संस्कृतिको महत्वपूर्ण अंश मानिन्छ।

यस्तो देख्दादेख्दै र जान्दा जान्दै पनि यस यस प्रकारको विवाहका पैरवी कर्ताहरुले परिवारको सम्पत्ति र सामाजिक एकतालाई अक्षुण कायम राख्न यसले महत्वपूर्ण भूमिका खेलेको जिकिर गर्दछन्। कतिपय धार्मिक कानूनले पनि यसप्रकारको विवाहलाई अनुमति दिएको छ।

इस्लामको सबैभन्दा शक्तिशालि मानिने धार्मिक कानून अर्थात इस्लामिक कानून जसलाई शरिया कानून पनि भनिन्छ, ले कजिन विवाहलाई अनुमति दिन्छ । पैगम्बर मुहम्मदले आफ्नै कजिन (फुपूचेली) खदीजासँग विवाह गरेको ऐतिहासिक उदाहरण छ। धार्मिक कानूनलाई सामान्य कानून भन्दा शक्तिशाली मान्ने मुस्लिम समुदायमा यस प्रकारको विवाहले धार्मिक शुद्वता कायम राख्छ भन्ने मान्यताले गहिरोसँग जरा गाडेको पाइन्छ। नेपालमा पनि यो प्रथा थारु जस्ता समुदायमा सीमित छ भन्ने गरिन्छ।

हाम्रा पूर्वजहरु विवाहका मामिलामा निकै सजग भएको देखिन्छ। पानी मिउनु मूलको विहे गर्नु कुलको भन्दै छोरी माग्न जाँदा सात जोर जुत्ता फटालेको गफ गरेको सुनिन्थ्यो। चिना भिडाएर ग्रहदशा मिलेनमिलेको जाँचेर तौलेर मात्र विवाह गर्थे/गराउथे। बत्तीस गुणले युक्त कन्या हुनुपर्छ भन्दै सात गाँउ चारेको कुरा गर्थे।

नेपालको इतिहासमा श्री ५ हरुका लागि ३२ जना सम्म कन्याहरु डोलाका रुपमा भारतका विभिन्न ठाँउ डुलेर ल्याएको पढ्न पाइन्छ। अहिले त विवाह केटाकटीकी खेल जस्तो बनेको छ । अर्थात, आज विवाह भोलि डिभोर्स, अर्थात पारपाचुके। अहिले विभिन्न कारणले यस प्रकारको विवाहमा कमि आएको भए पनि बसाँइसराइ र पुस्ता खोजाइको अभावमा अन्जानवस पनि यस प्रकारका विवाह हुनजाने सम्भावना भने बढदै गएको आशंका गर्नेहरु पनि छन्।

प्रा ची न का ल मा जानेर वा नजानेर हाम्रा पूर्खाले बसाएका प्रथा र परम्परा केहीहदसम्म वैज्ञानिक रहेको तथ्य र सत्य अहिलेका वैज्ञानिक अनुसन्धानले पुष्टि गरिरहेका छन्। ज्कक्थ(२०११) ले समानान्तर कजिन विवाहबाट हुने आनुवंशिक जोखिमकाबारेमा व्यवस्थित अनुसन्धान गरेका छन्। उनको अध्ययनले मध्य पूर्व, दक्षिण एसिया, र उत्तरी अफ्रिकामा प्रचलित यस प्रथाको स्वास्थ्य प्रभावलाई प्रकाशमा ल्याएको छ।

त य सै ग री ीबलअभलत(२०१९) ले मध्य पूर्वमा रक्त सम्बन्धित विवाह र शिशु मुत्यु दर शिर्षकमा गरेको अध्ययनले पनि कजिन विवाहले शिशु स्वास्थ्यमा गम्भीर नकारात्मक प्रभाव पारेको देखाएको छ। ज्कक्थ को अनुसन्धानमा यस्ता बाबुआमाबाट जन्मिएका बच्चाहरुमा आनुवंशिक रोगको खतरा अन्य विवाहबाट जन्मिने बच्चामा भन्दा २-३ गुणा बढी रहेको देखिन्छ।

त्यसैगरी जन्मजात विकृत बच्चाहरुको दर ज्कक्थ का अनुसार ६ प्रतिशत छ भने ीबलअभलत का अनुसार ६ .८ प्रतिशत छ जवकि सामान्य अवस्थामा यो दर २-३ प्रतिशत रहेको जिकिर गरेका छन् दुबैजनाले। दुबै अनुसन्धानको नतिजा अनुसार सामान्यभन्दा शिशु मृत्यु दर ४ .४ प्रतिशत बढी रहेको देखिन्छ।

अझ खतरनाक कुरा त लगातार कजिन विवाह गर्दा आनुवंशिक बोझ बढ्छ,जसले गर्दा पछिल्ला पुस्ताहरुमा जटिल रोगहरु जस्तै मधुमेह, हृदयरोगको सम्भावना बढ्छ भन्ने उनीहरुको अध्ययनले देखाउछ। दुबैजनाको सुझाव कजिन विवाह गर्न चाहने जोडीहरुलाई विवाह अगाडि जेनेटीक काउन्सेलिङ र परीक्षण अनिवार्य गरिनु पर्ने रहेको छ। साथै ग्रामीण भेगमा विशेष गरी स्वास्थ्य शिक्षासम्बन्धी कार्यक्रममा यसलाई समेटनु पर्ने आवश्यकता औंल्याएका छन्।

मेडिकल विधामा काम गरिरहेका स्वास्थ्यकर्मीहरु पनि यसप्रकारको विवाहका बारेमा चिन्तित रहेको देखिन्छ। प्रत्यक्ष परोक्ष रुपमा यस्ता विवाहबाट जन्मिएका बच्चाहरुको उपचारमा उनीहरु जोडिन पुग्छन। उनीहरु पनि यही समाजका एक अङ्ग हुन्। अर्कोतिर राज्यको ठूलो लगानी यस्ता बाबालिकाको उपचारमा खर्चिनु पर्ने भएकाले राज्य पनि यसप्रकारको विवाहलाई निरुत्साहीत गर्नतिर लाग्नुपर्छ।

सन् २०२० मा जर्नल अफ मेडिकल एथिक्सले 'कजिन विवाहमा कानूनी र नैतिक मुद्दाहरू' शीर्षकमा गरेको अध्ययनले मूलतः कानूनी विवाद, नैतिक द्वन्द्व, र सामाजिक प्रभावमा केन्द्रित रहेको छ। यसले पश्चिमा र पारम्परिक समाजहरूबीचको द्वन्द्वलाई उजागर गरेको छ। यस अध्ययनले पनि कजिन विवाहबाट जन्मिएका बच्चाहरूमा गम्भीर रोगको सम्भावना २-३ गुणा बढ्छ भन्ने निष्कर्ष दिएको छ। यस अध्ययनले पनि कानूनी प्रतिबन्ध भन्दा पनि विवाह अगाडी जेनेटिक परामर्श दिनुका साथै शिक्षा र स्वास्थय सेवा बढाउन जोड दिएको छ।

यसका अतिरक्त यस प्रकारको विवाहको सांस्कृतिक संवेदनशीलतालाई ख्याल गर्दै सामाजिक टयाबु नबनाई वैज्ञानिक चर्चाको रुपमा अगाडि बढाउन सुझाव दिएको छ। ऋ य ल क ब ल न ग ष ल ष त थ बलम न्भलभतष्अ म्क्यचमभचक ष्ल द्यचबशर्ष" (२०१७) र क्यअर्ष्बा बलम न्भलभतष्अ क्ष्उबअतक या ऋयगकष्ल :बचचष्बनभ ष्ल द्यचबशर्ष" (२०२०) जस्ता अनुसन्धानले पनि माथिका तथ्य र सामाजिक संरचनाका नजिक नजिक रहेर निष्कर्ष र सुझावहरु दिएका छन्।

नेपालले मुलुकी ऐनमा हाडनाता करनीका बारेमा कानूनी प्रबन्ध गरेको छ। त्यो मात्र पर्याप्त छैन, त्यस प्रकारको विवाहबाट जन्मिने सन्तानको स्वास्थ्य समस्यका बारेमा विद्यालय शिक्षामा समावेश गरी जनजागरण ल्याउन पहल गर्नुपर्छ। आमाबुबाहरु पनि यस प्रकारको विवाह हुन नदिन सजग हुनुपर्छ।

अहिले कुल संरक्षण वा वंशावली बनाउने होड चलेको छ। यसले पनि यस प्रकारका विववाहलाई कम गर्न अवश्य पनि सकरात्मक भूमिका नै खेल्ने नै छन्।

हिजो कुन समय र परिवेशमा शुरु गरिएका यस्ता विवाह आज जरुरत नपर्न सक्छन्। विश्व आज हातको एउटा मोबाइलमा सीमित हुन पुगेको छ।अझै पनि कतै-कतै गरिबी र शिक्षाका अभावमा गरिने यस प्रकारको विवाहमा कमि ल्याई समाज सुधारका लागि कडा कानूनी प्राब्धान भन्दा पनि जेनेटिक परामर्श र वैज्ञानिक जनचेतना मार्फत शिक्षा र स्वास्थ्यसँग जोडेर अघि बढ्न आवश्यक देखिन्छ। यदि त्यसो गर्न सकिएन भने समाजमा विकलाङ्गहरुको संख्या बढ्ने, शिशु मृत्यु दर बढ्ने र नसर्ने रोगबाट ग्रस्तहरुको संसार हुने अवस्था नआउला भन्न सकिँदैन।

थाहा छैन, माथि उल्लेखित पात्रको विवाह भयो कि नाई। यदि भएको रहेन छ भने नहोस र भैसकेको रहेछ भने आशा गरौं उनीहरुका सन्तान स्वस्थ जन्मिउन्।

(अर्याल त्रिभुवन विश्वविद्यालयमा कार्यरत राजनीतिशास्त्रका प्राध्यापक हुन् ) - खबरहबबाट

समाप्त

# मध्यपुर थिमि नगरपालिकाको आ.व. २०८२/०८३ को नीति तथा कार्यक्रमः एक सिंहावलोकन

मध्यपुर थिमि नगरपालिकाले आ.व. २०८२/०८३ का लागि "हाम्रो कला, हाम्रो संस्कृतिः मध्यपुर थिमि, हाम्रो सम्पत्ति" भन्ने मूल नाराका साथ गौरवमय नीति तथा कार्यक्रम प्रस्तुत गरेको छ। यसले सांस्कृतिक जीवन्त शहरका रूपमा नगरको विकास गर्ने परिकल्पना गरेको छ।

नीति तथा कार्यक्रमका आधार र प्राथमिकताहरूः

यस नीति तथा कार्यक्रमलाई नेपालको संविधान २०७२, दिगो विकासका लक्ष्य २०३०, स्थानीय सरकार सञ्चालन ऐन, २०७४, राष्ट्रिय योजना आयोगको मार्गदर्शन, र नियामक निकायहरूको निर्देशनका साथै नगरपालिकाको दीर्घकालीन सोच र जनताका अपेक्षालाई आधार बनाइएको छ।

मुख्य प्राथमिकताका क्षेत्रहरूः

नगरपालिकाले निम्न ९ वटा क्षेत्रलाई प्राथमिकतामा राखेर काम अगाडि बढाउने जनाएको छः

१. सुशासन तथा गुणस्तरीय सार्वजनिक सेवा प्रवाहः पारदर्शिता, जवाफदेहिता, सदाचारिता, विद्युतीय प्रणालीको प्रयोग, र कर्मचारीको क्षमता विकासमा जोड।

२. शिक्षा, स्वास्थ्य र खेलकुदः शैक्षिक गन्तव्य बनाउने, प्राविधिक शिक्षा प्रवर्द्धन, गुणस्तरीय स्वास्थ्य सेवा, र खेलकुद पूर्वाधार विकास।

३. सामाजिक समावेशीकरणः लैङ्गिक समानता, सामाजिक न्याय, बालमैत्री शासन, र जेष्ठ नागरिकको सम्मान।

४. कृषि तथा पशुपन्छी विकासः आधुनिक कृषि, उत्पादन वृद्धि, पशुपालन प्रवर्द्धन, र व्यवस्थित वधस्थल सञ्चालन।

५. उद्योग, वाणिज्य, सहकारी तथा रोजगारी प्रवर्द्धनः लघु तथा घरेलु उद्योगलाई प्रोत्साहन, सिप विकास, र रोजगार सृजना।

६. वन, वातावरण, जलवायु परिवर्तन तथा विपद् व्यवस्थापनः स्वच्छ, सफा र हरियाली प्रवर्द्धन, फोहरमैला व्यवस्थापन, र विपद् पूर्वतयारी।

७. कला, संस्कृति, सम्पदा तथा पर्यटन प्रवर्द्धनः सांस्कृतिक सम्पदाको संरक्षण, प्रवर्द्धन र पर्यटन बोर्डको स्थापना।

८. पूर्वाधार विकासः व्यवस्थित भवन निर्माण, सडक मर्मत, शहरी विकास, खानेपानी र सरसफाइको व्यवस्था।

९. सूचना प्रविधिः डिजिटल प्रोफाइल, अनलाइन भुक्तानी, र साइबर सुरक्षामा जोड।

प्रमुख नीति तथा कार्यक्रमहरूः

१. सुशासन र संस्थागत विकासः

सुशासन नीतिः सार्वजनिक सेवालाई चुस्त, पारदर्शी र सेवाग्राहीमैत्री बनाउने, कार्यसम्पादन करार सम्झौता, कर्मचारी व्यवस्थापनमा पारदर्शिता, भ्रष्टाचारमा शून्य सहनशीलता, र गुनासो सुनुवाइलाई प्रभावकारी बनाउने।

सूचना प्रविधि नीतिः विद्युतीय प्रणाली मार्फत समग्र प्रगति अनुगमन, पर्यटन सूचना पोर्टलको विकास, न्क्ष्क मा आधारित घर नम्बरिङ, र डिजिटल प्रोफाइलको प्रयोग।

आर्थिक प्रशासन नीतिः विद्युतीय भुक्तानी प्रणाली, बेरुजु फछ्र्योटमा शून्य सहनशीलता, र प्रशासनिक खर्चमा मितव्ययिता।

राजस्व नीतिः करदाताको क्षमतालाई ध्यान दिई कर पुनरावलोकन, कर तिर्ने संस्कृति विकास, उत्कृष्ट करदातालाई सम्मान, र अनलाइन भुक्तानी प्रणालीको सुधार।

कानून तथा फैसला कार्यान्वयन नीतिः मानव अधिकार संरक्षण, सूचना प्रविधिबाट न्याय सम्पादन, न्यायिक समितिलाई सक्षम बनाउने, र वडास्तरमा मेलमिलाप केन्द्र स्थापना।

२. पूर्वाधार विकासः

पूर्वाधार विकास नीतिः नगरपालिकाको प्रशासकीय भवन र वडा कार्यालय भवन निर्माण, आयोजना बैंक निर्माण, सार्वजनिक जग्गा संरक्षण, र पुरातात्विक सम्पदा पुनर्निर्माणमा लागत सहभागिता नलिने।

भवन नीतिः नक्सा पास प्रक्रियालाई वैज्ञानिक र आधुनिक बनाउने, परम्परागत शैलीका घर निर्माणमा प्रोत्साहन।

यातायात नीतिः सडक मर्मतसम्भार, सडक पेटीलाई पैदल यात्रीको अधिकार क्षेत्रको रूपमा स्थापित गर्ने, सार्वजनिक सडकमा पार्किङ निषेध, र सडक निर्माणमा गुणस्तर सुनिश्चितता।

शहरी विकास नीतिः नयाँ बस्ती विकास र जग्गा एकीकरण आयोजना सञ्चालन, खानेपानी तथा ढल प्रणालीको विद्युतीय अभिलेख, र ऐतिहासिक बस्तीको सौन्दर्यीकरण।

वातावरण, सरसफाइ तथा फोहरमैला व्यवस्थापन नीतिः स्वच्छ, सफा र हरियाली प्रवर्द्धन, फोहोरमैलाको अन्तिम विसर्जन स्थल खोजी, वृक्षारोपण, बाढी, पहिरो तथा भू-क्षय नियन्त्रण, र फोहोरको स्रोतमा नै वर्गीकरण।

खानेपानी तथा सरसफाइ नीतिः ऐतिहासिक पानीको मुहान, कुवा, ढुंगेधारा, पोखरीको संरक्षण, र स्वच्छ तथा शुद्ध खानेपानीको सहज आपूर्ति।

जलस्रोत तथा भू संरक्षण नीतिः भूमिगत पानीको अव्यवस्थित दोहनलाई निरुत्साहित गर्ने, र पानीका स्रोतहरूको संरक्षण।

विपद व्यवस्थापन नीतिः विपद व्यवस्थापन कोषलाई सुदृढ गर्ने, खोज, उद्धार तथा राहत सामग्री वितरण, एम्बुलेन्स, शव बाहन तथा दमकलको व्यवस्था, र स्थानीय विपद तथा जलवायु उत्थानशील कार्य योजना कार्यान्वयन।

३. सामाजिक विकासः

शिक्षा नीतिः नर्सिङ कलेज र पारामेडिक्स कोर्स सञ्चालन, प्राविधिक तथा व्यावसायिक शिक्षा प्रवर्द्धन, शैक्षिक संस्थाको नियमन, र सामुदायिक विद्यालयको गुणस्तर सुधार।

युवा तथा खेलकुद नीतिः मध्यपुर खेलकुद मैदानको पूर्वाधार विकास, नगर खेलकुद विकास समिति गठन, र खेलकुद प्रतियोगिता तथा प्रशिक्षण सञ्चालन।

महिला बालबालिका तथा सामाजिक समावेशीकरण नीतिः लैङ्गिक समानता, सशक्तिकरण, सामाजिक न्याय, बालश्रम मुक्त नगर स्थापना, र बालमैत्री स्थानीय शासन नगर घोषणा।

स्वास्थ्य नीतिः आधारभूत स्वास्थ्य सेवामा लगानी वृद्धि, सामुदायिक स्वास्थ्य प्रणाली सुदृढीकरण, स्वास्थ्य बीमा कार्यक्रम विस्तार, र सरुवा तथा नसर्ने रोगहरूको नियन्त्रण।

४. आर्थिक विकासः

कृषि विकास नीतिः आधुनिक प्रविधिको प्रयोग, उत्पादकत्व वृद्धि, कौसी खेतीलाई प्रभावकारी बनाउने, र कृषि पूर्वाधार विकास।

पशुपन्छी विकास नीतिः पशु वधस्थललाई वैज्ञानिक बनाउने, छाडा चौपाया नियमन, र पशुपालन क्षेत्रको विकास।

उद्योग तथा रोजगारी प्रवर्द्धन नीतिः लघु उद्यम तथा साना घरेलु उद्योगलाई प्रोत्साहन, व्यावसायिक तथा सिप विकास तालिम, र परम्परागत पेशाको संरक्षण।

वित्त तथा सहकारी नीतिः सहकारी संस्थाहरूको अनुगमन, एकीकरणमा प्रोत्साहन, र पर्यटन क्षेत्रमा सहकारीको लगानी।

संस्कृति संरक्षण तथा पर्यटन प्रवर्द्धन नीतिः पर्यटकीय गन्तव्यको रूपमा विकास, सम्पदा संरक्षण, र मध्यपुर पर्यटन बोर्डको स्थापना।

समग्रमा, मध्यपुर थिमि नगरपालिकाले आगामी आर्थिक वर्षमा सुशासन, पूर्वाधार विकास, सामाजिक र आर्थिक विकासका साथै सांस्कृतिक सम्पदाको संरक्षण र प्रवर्द्धनलाई उच्च प्राथमिकता दिएको देखिन्छ। यसले नगरवासीको जीवनस्तर सुधार गर्ने र नगरलाई एक जीवन्त तथा समृद्ध शहरको रूपमा स्थापित गर्ने लक्ष्य लिएको छ।

# सरकारी अनुदानबारे दुई जनाविरुद्ध साइबर अपराध मुद्दा



काठमाडौं । सरकारी अनुदान सम्बन्धी विषयमा फेसबुकमा भिडियो रिपोर्ट सार्वजनिक गरेपछि दुई व्यक्तिमाथि साइबर अपराधअन्तर्गत मुद्दा दायर भएको छ। लाक्पा तामाङको फेसबुक पेजमा राखिएको सो भिडियोका कारण उनीसहित सोमबहादुर घिसिङलाई कानुनी कारबाहीको दायरामा ल्याइएको हो।

धनकुटा जिल्ला प्रहरी कार्यालयमा २ जेठमा तुलसी राईले दिएको जाहेरीका आधारमा उनीहरू विरुद्ध अनुसन्धान अघि बढाइएको थियो। अनुसन्धानपछि सामाजिक सञ्जालमा आधारहीन, झुटा, भ्रामक र अपमानजनक सामग्री प्रकाशन गरेको आरोपमा साइबर अपराधसम्बन्धी मुद्दा चलाइएको हो।

सरकारी वकिलको कार्यालयले ५ असारमा जिल्ला अदालतमा लाक्पा तामाङ र सोमबहादुर घिसिङविरुद्ध औपचारिक रुपमा मुद्दा दायर गरेको छ। अभियोग पत्रअनुसार, सोमबहादुर घिसिङले प्रत्यक्ष स्थलगत अनुगमन गरी स्थानीय कृषकसँगको संवादका आधारमा सत्य विवरण समेटेर भिडियो बनाएको दाबी गरेका छन्। उनका अनुसार, "सत्य घटनालाई उजागर गर्न बनाइएको भिडियो हो। वास्तविक कृषकहरूले अनुदान नपाएको गुनासो गरेकाले भिडियोमा सो कुरा उल्लेख गरिएको हो।"

भिडियोमा तुलसी राईले मनकला लिम्बुसँग मिलेर बनाएको बहुउद्देश्यीय कृषि तथा पशुपालन फर्मले अनुदान प्राप्त गरे पनि त्यसअनुसारको काम नभएको आरोप लगाइएको छ। भिडियोमा देखाइएको अनुसार, "न खोर छ, न सुँगुर–सबै कुरा कागजमै सीमित छन्। अनुदान पार्टी निकटका व्यक्तिले मात्र पाएका छन्," भन्ने भनाइ सार्वजनिक गरिएको थियो। तर अभियोग पत्रमा भनिएको छ कि उक्त फर्मले घरेलु तथा साना उद्योग कार्यालय, धनकुटासँग अनुदानसम्बन्धी सम्झौता गरिसकेको थियो तर रकमको पूर्ण भुक्तानी नभइसकेको अवस्थामा नै गलत र भ्रामक सूचनासहितको भिडियो सार्वजनिक गरिएको हो। साथै, भिडियोमा प्रयोग गरिएका शब्दहरूले महिला व्यवसायीहरूको मानमर्दन गर्ने, हतोत्साहित गर्ने र सार्वजनिक मर्यादाविपरीत आचरण देखिएको आरोप लगाइएको छ।

तुलसी राई नेकपा एमालेका धनकुटा जिल्ला सहसचिव रहेको जनाइएको छ।

# खाना कहिले सड्न थाल्छ ? यस्तो छ कारण र समाधान

काठमाडौं – दाल, भात, तरकारी, मासु, रोटी र सागसब्जी नेपाली घरभित्र दैनिक प्रयोग हुने मुख्य परिकार हुन्। तर, यिनलाई केही घण्टाभन्दा बढी खुला वा सामान्य तापक्रममा राख्दा गन्ध, स्वाद र रङमा परिवर्तन देखिन थाल्छ। विशेषज्ञहरूका अनुसार यही प्रक्रिया नै खानाको सड्ने सुरुआती संकेत हो।

केही घण्टामै बिग्रने खतरा

खासगरी गर्मीयाममा दाल, भात, तरकारीजस्ता पानीयुक्त परिकार ४ देखि ६ घण्टाभित्रै सड्न थाल्छन्। खाद्य अनुसन्धान अधिकृत विक्रम लिम्बुका अनुसार ती खानेकुरामा पानी र पोषक तत्त्व धेरै हुने भएकाले सूक्ष्म जीव (ब्याक्टेरिया, ढुसी) छिट्टै सक्रिय हुन्छन्।

"१२ घण्टा पुग्दा तीव्र गन्ध आउन थाल्छ, स्वाद फेरिन्छ, र एक-दुई दिनभित्र पूरै सडेर खान अयोग्य बन्छ," उनले बताए।

सड्ने प्रक्रिया कसरी हुन्छ?

खाना बिग्रनु जैविक, रासायनिक र भौतिक कारणहरूले हुन्छ। जैविक रूपमा, खानेकुरामा भएका ब्याक्टेरिया वा यिस्ट (ढुसी) पोषक तत्त्वहरूमा पर्छन्, जसले सडनको प्रक्रिया सुरु गर्छ। उदाहरणका लागि, दूध ब्याक्टेरियाको असरले अमिलो हुन्छ।

रासायनिक रूपमा, अक्सिजनको सम्पर्कमा आएका बोसो वा तेलहरू बासी हुँदै गन्हाउने हुन्छन्। भौतिक रूपमा भने अत्यधिक तापक्रम, आर्द्रता र प्रकाशले सूक्ष्म जीवको वृद्धि तीव्र बनाउँछ। तापक्रम २०-४० डिग्री सेल्सियसका बीच ब्याक्टेरिया फस्टाउँछन्।

खाना बिग्रिएको कसरी थाहा पाउने?

खाना सड्न थालेपछि त्यसको गन्ध, रङ, स्वाद र बनावटमा स्पष्ट परिवर्तन देखिन्छ। खाद्य अनुसन्धान अधिकृत उज्ज्वल रायमाझी भन्छन्, "खाना सडेको संकेत अमिलो वा कुहिएको गन्ध हो। साथसाथै रङ हरियो वा कालोमा परिणत हुन्छ। स्वाद अप्रिय वा अमिलो हुन्छ र बनावट चिप्लो वा सुख्खा देखिन्छ।"

तताउँदा सुरक्षित हुन्छ त?

७० डिग्री सेल्सियसभन्दा माथिको तापमा धेरैजसो ब्याक्टेरिया नष्ट हुन्छन्। तर, क्लोस्ट्रिडियम जस्ता ब्याक्टेरियाले बनाएको विष पदार्थ भने तताउँदा पनि हट्दैन। रायमाझीका अनुसार, "सडेको खाना तताउँदा केही ब्याक्टेरिया मरे पनि विषाक्त टक्सिन भने ज्यूँका त्यूँ रहन्छ।"

स्वास्थ्यमा पर्ने असर

सडेको खाना खाँदा पेट दुख्ने, ग्यास, पखाला, बान्ता जस्ता समस्या देखिन सक्छन्। इन्टरनल मेडिसिन विशेषज्ञ डा. विद्या सागर प्रसादका अनुसार, "पेटको भित्री तहमा जलन, ग्यास्ट्राइटिस लगायत दीर्घकालीन असर समेत पर्न सक्छ।"

खाना बिग्रन नदिन के गर्ने?

- पकाएको खाना तुरुन्तै ४ डिग्री सेल्सियसको फ्रिजमा राख्ने
- एयरटाइट डब्बामा राखेर हावा र आर्द्रता प्रवेशबाट जोगाउने
- आवश्यक मात्रामा मात्र पकाउने
- फ्रिजबाट झिकेको खाना ७० डिग्री सेल्सियसभन्दा माथि तताएर मात्र खाने
- काँचो र पकाएको खाना छुट्टाछुट्टै राख्ने
- लामो समयका लागि -१८ डिग्री सेल्सियसमा फ्रिजरमा राख्ने

रायमाझी भन्छन्, "हरेक खानेकुराको आफ्नै सेल्फ लाइफ हुन्छ। दूध २-३ दिन, मासु १-२ दिनमै बिग्रन सक्छ। त्यसैले समयमै प्रयोग गर्ने बानी बसाल्नुपर्छ।"

# रसायन प्रयोग गरेर पकाइएको आँप स्वास्थ्यका लागि जोखिमपूर्ण

काठमाडौं – अहिले बजारमा पाइने धेरैजसो आँप प्राकृतिक रूपमा नभई रसायन प्रयोग गरेर पकाइएको पाइएको छ। स्वास्थ्य विशेषज्ञहरूका अनुसार यस्ता फलफूल खाँदा अपच, मुखमा घाउ, छालामा कोक्याउने समस्या मात्र होइन, पेटसम्बन्धी गम्भीर रोगसमेत निम्तिन सक्छन्।

पोषणविद् रश्मी बजिमयका अनुसार नेपालमा प्राकृतिक रूपमा पाक्ने आँपको सिजन जेठको तेस्रो हप्तापछि सुरु हुन्छ। त्यसअघि देखिएका आँपहरूमध्ये धेरैजसोमा क्याल्सियम कार्बाइडजस्ता खतरनाक रसायन प्रयोग हुने गर्छ। यस्तो रसायनले पाचन प्रणालीमा असर गर्ने, घाँटी दुख्ने, र दीर्घकालीन रूपमा क्यान्सरसम्म गराउन सक्ने सम्भावना हुन्छ।

बजारमा अहिले छ्यापछ्याप्ती देखिने आँपहरू असमयमै हावाहुरीले झरेका वा काँचै तोडिएका हुन्। तिनलाई जबर्जस्ती रसायन प्रयोग गरी पकाएर बजारमा पठाइने गरिएको छ। आँपको बोटबाट फल छुटिएको ठाउँ (भेट्नो भाग) विशेष रूपमा विषादीले प्रभावित हुने भएकाले त्यो भाग हटाई पानीमा राम्रोसँग धुने सल्लाह दिइन्छ।

भन्सार विभागका अनुसार चालु आर्थिक वर्षको चैतसम्म २५ करोड रुपैयाँभन्दा बढीको आँप आयात भइसकेको छ। भारत, चीन, थाइल्याण्ड, पाकिस्तान र फिलिपिन्सलगायत देशबाट आयात हुने आँपमध्ये धेरैमा विषादीको जोखिम रहेको आशंका गरिएको छ।

फलफूल तथा तरकारीमा प्रयोग हुने विषादी परीक्षण गर्ने प्रयोगशालाको अभावले गर्दा राज्यले गुणस्तर नियमन गर्न सकिरहेको छैन। फलस्वरूप विषादीयुक्त आयातित फलफूल सजिलै बजारमा छिरिरहेको छ। यस्ता खाद्य वस्तु नियन्त्रणका लागि सम्बन्धित निकाय–भन्सार, प्लाण्ट क्वारेण्टाइन तथा विषादी व्यवस्थापन केन्द्र, र सीमा सुरक्षा निकायहरूबीच समन्वय आवश्यक छ।

राष्ट्रिय फलफूल विकास केन्द्रका प्रमुख महेशचन्द्र आचार्यका अनुसार उपभोक्ता स्वयं सचेत हुनुपर्ने पहिलो आवश्यकता हो। त्यस्तै, राज्यले आयात नियन्त्रण गर्न प्राविधिक प्रमाण जुटाउन सक्ने व्यवस्था मिलाउनु आवश्यक छ। विषादी परीक्षणको आधारमा आयातमा शर्त राख्ने, नमूना परीक्षण गर्ने र सीमा सुरक्षा बललाई सकृय बनाउने उपायले समस्याको समाधान खोज्न सकिने उनको सुझाव छ।

विशेषज्ञहरूका अनुसार बेमौसमी आँप उपभोग गर्नै परे, भेट्नो भाग काटेर पानीमा डुबाएर राम्ररी धोएपछि मात्र सेवन गर्नु उचित हुन्छ। यसरी बाहिरी सतहमा रहेको विषादीको मात्रा केही हदसम्म हटाउन सकिन्छ।

# अमेरिकाले विदेशी विद्यार्थी भिसा प्रक्रिया अस्थायी रूपमा रोकेको घोषणा

काठमाडौं – अमेरिकी सरकारले विदेशी विद्यार्थीहरूका लागि भिसा प्रक्रिया अस्थायी रूपमा रोक्ने निर्णय गरेको छ। सामाजिक सञ्जाल परीक्षण प्रणालीलाई कडा बनाउने नयाँ नीतिसँगै अमेरिकी विदेश मन्त्रालयले दूतावास र वाणिज्य दूतावासहरूलाई अर्को निर्देशन नआएसम्म विद्यार्थी भिसा नदिन आग्रह गरेको अलजजिराले जनाएको छ।

यो निलम्बन कति समयसम्म लागू रहने भन्ने विषयमा स्पष्ट जानकारी दिइएको छैन। तर, सम्बन्धित कर्मचारीहरूलाई 'केही दिनभित्र' थप निर्देशहरू दिइने उल्लेख गरिएको छ।

ट्रम्प प्रशासनले हालैका दिनमा अमेरिकी विश्वविद्यालयहरू तथा तिनमा अध्ययन गर्ने विदेशी विद्यार्थीहरूप्रति कडा रवैया अपनाउँदै आएको छ। यसै सन्दर्भमा हार्वर्ड विश्वविद्यालयलाई विदेशी विद्यार्थी भर्ना गर्न दिएको अनुमति समेत रद्द गरिएको थियो। हार्वर्डमाथि चिनियाँ पक्षसँग मिलेमतो र यहुदी विरोधी गतिविधिमा संलग्न भएको आरोप लगाइएको छ।

यद्यपि एक संघीय न्यायाधीशले सो निर्णयलाई हाललाई स्थगित गरेका छन्। साथै, ट्रम्प प्रशासनले हार्वर्डसँग बाँकी रहेका संघीय सम्झौताहरू पनि चाँडै रद्द गर्ने तयारीमा रहेको बताइएको छ, जसले यो प्रकरणलाई थप जटिल बनाउन सक्छ।

अमेरिकी विदेश मन्त्रालयकी प्रवक्ता ट्यामी ब्रुसले एक पत्रकार सम्मेलनमा अमेरिका आउन चाहने व्यक्तिले अमेरिकी कानुन बुझ्नुपर्ने र भिसा आवेदन प्रक्रियामा सबै चरण पार गर्न तयार हुनुपर्ने बताइन्। विशेष गरी विद्यार्थी भिसाका लागि आवेदन दिनेहरूले बढी जाँच भोग्नुपर्ने स्पष्ट पार्दै उनले भनेकी छन्, "तपाईंले सामान्य प्रक्रिया पुरा गर्नुपर्छ र आवश्यक छानबिनको सामना गर्न तयार रहनुपर्छ।"

ट्रम्प प्रशासनका पछिल्ला कदमहरूले अमेरिका भित्र अस्थायी रूपमा बसिरहेका व्यक्तिहरूका अधिकार र शैक्षिक स्वतन्त्रताको विषयमा संवैधानिक बहस सिर्जना गरिरहेको छ।

विदेशमन्त्री रुबियोले हालै अमेरिकी सिनेटमा बोलेका थिए कि ट्रम्पले सत्तामा आएदेखि 'हजारौं' भिसा रद्द गरिएका छन्, यद्यपि यस्ता भिसा रद्दको विस्तृत विवरण सार्वजनिक गरिएको छैन।

यो निर्णयले अमेरिकी शिक्षालयमा अध्ययन गर्न चाहने विश्वभरका विद्यार्थीहरूलाई गम्भीर असर पार्ने देखिएको छ।

# नेपालमा १८ प्रकारका साइबर अपराध: नयाँ विधेयकले के भन्छ?

नेपाल सरकारले डिजिटल माध्यमबाट हुने अपराधलाई सम्बोधन गर्न 'सूचना प्रविधि तथा साइबर सुरक्षा विधेयक, २०८२' ल्याउने तयारी गरेको छ। सञ्चार तथा सूचना प्रविधिमन्त्री पृथ्वीसुब्बा गुरुङले २०८२ जेठ २७ गते प्रतिनिधि सभामा दर्ता गरेको यस विधेयकले साइबर अपराधका १८ विभिन्न प्रकारका कसुरहरूलाई परिभाषित गरेको छ। यसमा विद्युतीय उपकरण, नेटवर्क र प्रणालीहरूको दुरुपयोग गरी गरिने गैरकानुनी गतिविधिहरूलाई छुट्याइएको छ, र प्रत्येक कसुरको लागि छुट्टै सजायको व्यवस्था गरिएको छ।

प्रस्तावित विधेयकको परिच्छेद १४ मा कसुर तथा सजायसम्बन्धी व्यवस्था छ, जसले दफा ८० देखि दफा ९८ सम्म कसुरका प्रकृति र तिनअनुसार हुने सजायहरू निर्धारण गर्दछ।

विधेयकले समेटेका १८ प्रमुख साइबर अपराधहरू:

१. मुलुकको साइबर सुरक्षामा अवरोध: विद्युतीय प्रणालीको प्रयोग गरी मुलुकको साइबर सुरक्षा वा तथ्याङ्क प्रणालीमा अवरोध पुऱ्याउने वा प्रतिकूल असर पार्ने कार्य दण्डनीय हुनेछ। यसमा पाँच वर्षसम्म कैद वा १० लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

२. विद्युतीय प्रणाली सञ्चालनमा हस्तक्षेप: आर्थिक लाभको उद्देश्यले विद्युतीय सूचना प्रविष्ट, सम्प्रेषण, हेरफेर वा मेटाउने, वा लुकाइछिपाइ विद्युतीय प्रणालीमा हस्तक्षेप गर्ने कार्य कसुर मानिनेछ। यसमा तीन वर्षसम्म कैद वा पाँच लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

३. सूचनाको चोरी: विद्युतीय प्रणालीमा प्रयोग हुने स्रोत सङ्केत (कम्प्युटर प्रोग्रामको सूचीकरण, निर्देशन, डिजाइन, लेआउट) तथा सूचनाको अनधिकृत चोरी, नष्ट गर्ने वा परिवर्तन गर्ने कार्य साइबर अपराध हो। चोरीको सूचना जानीजानी खरिद-बिक्री गर्नेलाई पनि तीन वर्षसम्म कैद वा पाँच लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुनेछ।

४. कम्प्युटरमा अनधिकृत पहुँच: कसैको युजर एकाउन्ट वा कम्प्युटर प्रणालीमा अनधिकृत पहुँच पुऱ्याएर डाटाको अखण्डतामा फरक पर्ने गरी हेरफेर वा मेटाउने कार्य दण्डनीय हुन्छ। यसमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

५. प्रयोगकर्तालाई अवरोध: विद्युतीय प्रणालीको कार्य सञ्चालनमा बाधा पुऱ्याउने वा प्रयोगकर्तालाई प्रणाली प्रयोगमा अवरोध गर्ने, रोक लगाउने वा हस्तक्षेप गर्ने कार्यमा तीन वर्षसम्म कैद वा तीन लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

६. अर्को व्यक्तिको सूचना मेटाइदिनु: गलत मनसायले कसैको स्वामित्वमा रहेको विद्युतीय सूचनालाई अनधिकृत रूपमा मेटाउने, नष्ट गर्ने, हेरफेर गर्ने, बिगार्ने वा प्रयोगहीन बनाउने कार्यमा तीन वर्षसम्म कैद वा तीन लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

७. गोपनीयतामा खलल: विद्युतीय माध्यमबाट कसैको वैयक्तिक विवरण सङ्कलन गर्ने, सूचना अनधिकृत रूपमा प्राप्त गर्ने, गोपनीयता भङ्ग गर्ने वा अनधिकृत रूपमा उपलब्ध गराउने कार्य साइबर अपराध हो। अनुमति बिना संवाद रेकर्ड गर्ने कार्यमा दुई वर्षसम्म कैद वा तीन लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

८. झुट्ठा प्रमाणपत्र प्रकाशन: प्रमाणीकरण निकायले जारी नगरेको वा रद्द भइसकेको प्रमाणपत्रलाई जानीजानी प्रकाशन गर्ने वा कसैलाई उपलब्ध गराउने कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

९. अश्लील सामग्री उत्पादन: विद्युतीय प्रणालीमार्फत अश्लील सामग्री उत्पादन, सङ्कलन, बिक्री वितरण, प्रकाशन, प्रदर्शन, प्रसार वा सञ्चय गर्ने कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ (अनुसन्धान, कानुन कार्यान्वयन, अध्यापन वा चिकित्सकीय प्रयोजन बाहेक)।

१०. गोप्य कोड चोरी (फिसिङ/स्पुफिङ): फिसिङ (नक्कली लिङ्क वा सन्देशबाट संवेदनशील सूचना प्राप्त गर्ने) वा स्पुफिङ (अज्ञात स्रोतबाट आएको सञ्चारलाई विश्वसनीय देखाउने) जस्ता विधि प्रयोग गरी युजर एकाउन्टको पासवर्ड, पिनकोड, प्याटर्न वा टोकन लगायतका गोप्य कोड चोरी गर्ने कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

११. स्निफिङ: नेटवर्कमा प्रसारित डाटालाई सम्बन्धित पक्षको अनुमति बिना अनधिकृत रूपमा सुन्ने, पढ्ने वा हेर्ने (स्निफिङ) कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

१२. अर्काको कम्प्युटर एप्लिकेसन प्रवेश: कसैको कम्प्युटर वा कम्प्युटर प्रणालीमा अनुमतिबिना अवाञ्छित एप्लिकेसन प्रवेश गराउने वा फैलाउने कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

१३. डिनायल अफ सर्भिस (म्यक): सार्वजनिक प्रयोगमा रहेको कम्प्युटर प्रणालीको सञ्जाललाई डिनायल अफ सर्भिस जस्ता विधि प्रयोग गरी बन्द गर्ने वा अपेक्षित प्रयोगकर्ताका लागि पहुँच नपुग्ने वातावरण सिर्जना गर्ने कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

१४. इन्टरनेट अफ थिङ्स (क्ष्यत) मा आक्रमण: इन्टरनेट अफ थिङ्स (एकअर्काबीच डाटा आदानप्रदान गर्नसक्ने इलेक्ट्रोमेकानिकल उपकरणको सामूहिक सञ्जाल) मा आधारित उपकरण तथा सञ्जालमा अनुमति बिना आक्रमण गरी काममा खलल पुऱ्याउने कार्यमा दुई वर्षसम्म कैद वा दुई लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

१५. पासवर्ड दुरुपयोग: विद्युतीय माध्यममा रहेको व्यक्तिको निजी साँचो, पासवर्ड वा अन्य विद्युतीय पहिचानको स्थानान्तरण, नियन्त्रण वा प्रयोग गरी कसुर गर्ने मनसायले पहिचानको दुरुपयोग गर्ने कार्यमा एक वर्षसम्म कैद वा एक लाख रुपैयाँसम्म जरिबाना वा दुवै सजाय हुन सक्छ।

१६. एआईबाट अपराध: कृत्रिम बौद्धिकता (आर्टिफिसियल इन्टेलिजेन्स) को प्रयोग गरी यस ऐनबमोजिम कसुर मानिने कार्य गरेमा सोही व्यक्तिले गरे सरह मानी सजाय हुनेछ।

१७. उक्साउने र मतियार दुवै अपराधी: साइबर अपराध गर्न दुरुत्साहन गर्ने वा आपराधिक षडयन्त्रमा संलग्न हुने व्यक्तिलाई मुख्य कसुरदारलाई भए सरहको सजाय हुनेछ। कसुर गर्न सघाउने वा मतियार हुने व्यक्तिलाई मुख्य कसुरदारको सजायको आधा सजाय हुनेछ।

१८. संस्था पनि जिम्मेवार: कुनै फर्म, कम्पनी वा सङ्गठित संस्थाले साइबर अपराध गरे वा गराएमा कार्य गर्ने व्यक्ति जिम्मेवार हुनेछ। यदि व्यक्ति किटान हुन नसकेमा सम्बन्धित धनी, हिस्सेदार, सञ्चालक, प्रबन्ध सञ्चालक वा महाप्रबन्धकले आपराधिक दायित्व बेहोर्नु पर्नेछ।

यी कसुरहरूमा उल्लेखित सजायका अतिरिक्त, प्रचलित कानुनबमोजिम थप सजाय गर्न पनि बाधा नपर्ने व्यवस्था विधेयकको दफा ९९ मा छ। साइबर अपराधबाट कसैलाई हानि-नोक्सानी, हैरानी वा क्षति भएको रहेछ भने त्यस्तो क्षतिपूर्ति सम्बन्धित कसुरदारबाट भराइनेछ।

यो ऐनबमोजिमका कसुरसँग सम्बन्धित मुद्दामा नेपाल सरकार वादी हुनेछ। साइबर अपराध भएको थाहा पाएको मितिले ६ महिनाभित्र सूचना प्रविधि विभाग वा राष्ट्रिय साइबर सुरक्षा केन्द्रमा उजुरी गर्नुपर्ने बाध्यकारी व्यवस्था विधेयकको दफा १०२ मा गरिएको छ। विभाग वा केन्द्रको जरिबाना उपर चित्त नबुझेमा ३५ दिनभित्र सम्बन्धित जिल्ला अदालतमा पुनरावेदन गर्न सकिनेछ।

यो विधेयकले नेपालमा बढ्दो साइबर अपराधलाई नियन्त्रण गर्न महत्त्वपूर्ण भूमिका खेल्ने अपेक्षा गरिएको छ। के तपाईंलाई यस विधेयकका कुनै खास पक्षबारे थप जानकारी चाहिएको छ?



# क्लब विश्वकपमा पिएसजीको भेट इन्टर मायमीसँग

एजेन्सी । अमेरिकामा जारी फिफा क्लब विश्वकपको अन्तिम १६ को खेलमा इन्टर मायमीले पेरिस सेन्ट जर्मेन (पिएसजी) को सामना गर्ने भएको छ ।

पिएसजी समूह बी को विजेता र इन्टर मायमी समूह ए को उपविजेता बनेसँगै यी दुई टोलीको भेट अन्तिम १६ चरणमा हुने पक्का भएको हो । यससँगै मायमीका कप्तान लिओनेल मेस्सीले आफ्नो पूर्व क्लब पिएसजीको सामना गर्ने भएका छन् । उनी गत सिजन पिएसजीसँग सम्बन्ध चिसिएपछि मायमी आएका थिए ।

समूह ए को दुवै खेल बराबरीमा सकिएपछि पाल्मेइरास समूह विजेता बन्न सफल रहेको हो । इन्टर मायमी र पाल्मेइरासको खेल २-२ को बराबरीमा सकिँदा एफसी पोर्टो र अल अहलीले ४-४ को रोमान्चक बराबरी खेले ।

इन्टरले खेलमा २-० को अग्रता लिएपनि त्यसलाई जोगाउन नसक्दा समूह विजेता बन्ने अवसर गुमायो । पहिलो हाफमा तादेओ आलेन्देको गोलमा इन्टरले अग्रता लिएको थियो । उनले १६ औं मिनेटमा सुआरेजले छुटाएको काउन्टर अट्याकमा गोल गरेका थिए ।

सुआरेजले ६५ औं मिनेटमा इन्टरको अग्रता दोब्बर पारे । उनले २ डिफेन्डरलाई बिट गर्दै पेनाल्टी क्षेत्र भित्रबाट गोल गरेका थिए । तर पाल्मेइरासले अन्तिम १० मिनेटमा २ गोल फर्कायो । ८० औं मिनेटमा पाउलिन्होले गरेको फितलो प्रहार गोल भयो । त्यसको ८ मिनेटपछि माउरिसियोले क्लियर हुन नसकेको बललाई गोलको दिशा दिए ।

अर्को खेलमा विसाम अबु अलीको ह्याट्रिकमा अल अहली र पोर्टोको खेल ४-४ को बराबरी भयो । अल अहलीले ४ पटक अग्रता लिएपनि पोर्टोले चारै पटक बराबरी गोल फर्काएको थियो । ८९ औं मिनेटमा पेपेले चौथो बराबरी गोल गरेका थिए ।

पाल्मेइरास र इन्टर समान ५-५ अंक जोड्दै अघि बढे । गोलअन्तरमा पाल्मेइरास शीर्षस्थानमा रह्यो । पोर्टो र अल अहलीले २-२ अंक जोडे ।

त्यसअघि पिएसजी समूह चरणको अन्तिम खेलमा सिआटल साउन्डर्सलाई २-० ले पराजित गर्दै अंक तालिकाको शीर्षस्थानमा उक्लिएको थियो । पिएसजीले खेलको ३५ औं मिनेटमा क्विचा क्वारात्क्षेलियाको गोलमा अग्रता लिएको थियो । दोस्रो हाफको ६७ औं मिनेटमा अक्रफ हाकिमीले अग्रता दोब्बर पारे ।

समूहको अर्को खेलमा एटलेटिको म्याड्रिडले बोटाफोगोलाई १-० ले पराजित गरेपछि पिएसजी समूह विजेता बनेको हो । एटलेटिकोले ८७ औं मिनेटमा एन्टोइन ग्रिजमनको गोलमा अग्रता लिएको थियो । बोटाफोगो आफैं भने बराबरी मात्र खेलेको अवस्थामा पनि समूह विजेता बन्ने थियो ।

एटलेटिको भने जितका बाबजुद अर्को चरणमा अघि बढ्न सकेन । अंक तालिकामा पिएसजी, बोटाफोगो र एटलेटिकोको समान ६-६ अंक भएपनि गोलअन्तरका आधारमा पिएसजी शीर्षस्थानमा र बोटाफोगो समूह उपविजेता बन्दै अघि बढे । सिआटल भने अंकविहिन रहेर पुछारमा रहँदै बाहिरियो ।

अब अन्तिम १६ मा पिएसजी र इन्टर मायमी खेल्नेछन् । त्यस्तै बोटाफोगोले पाल्मेइरासको सामना गर्नेछ ।

# नेपालको जापानमाथि ९ विकेटको सहज जित

काठमाडौं । नेपालले मलेसियामा जारी एसिसी मेन्स यु-१६ एलिट कपमा जापानलाई सहजै हराएको छ । नेपालले जापानमाथि ९ विकेटको सहज जित हात पारेको हो । जापानले दिएको ८१ रनको सामान्य लक्ष्य नेपालले १४.२ ओभरमा १ विकेट गुमाएर पूरा गर्यो ।

नेपाललाई सहज जित दिलाउन शिवान्श बजगाईंले बलमा ७ चौकाको सहयोगमा ३८ रन जोडे । अघिल्लो खेलका 'प्लेयर अफ द म्याच' रहेका प्रसिद्ध जैसी ३७ बलमा ३३ रनमा अविजित रहे । ओपनर जोय थापा १ रनमा आउट भए । त्यसअघि टस जितेर पहिले ब्याटिङ गरेको जापान ३४.३ ओभरमा ८० रनमा नै समेटियो । नेपालको उत्कृष्ट बलिङ सामू जापानको ब्याटिङ चल्न सकेन ।

जापानका कप्तान चार्ली हाराहिन्जीले ४८ बलमा ४ चौकाको सहयोगमा ३६ तथा गम्बी हाराहिन्जीले ३० बलमा १३ रन बनाए । जापानका ब्याटरले दोहोरो अंकमा रन जोड्न सकेनन् । नेपाली बायाँ हाते स्पिनर शुभम खनालले १० ओभरमा १५ रन खर्चिएर ५ विकेट लिए । अभय यादवले २ तथा शुशिल रावल र विपिन शर्माले समान १ विकेट लिए ।

नेपालले दोस्रो खेलमा अपराजित रहेको छ । नेपालको ४ अंक बनाएको छ । जापानको दोस्रो खेलमा यो पहिलो हार हो । पहिलो खेलमा नेपालले सिंगापुर तथा जापानले भुटानलाई पराजित गरेको थियो । एसियाली क्रिकेट परिषद् (एसिसी) को बार्षिक कार्यतालिका अनुसार प्रतियोगिता जारी प्रतियोगितामा नेपाल सहित १० टोलीको सहभागिता छ । सहभागी टोलीलाई दुई समूहमा विभाजन गरिएको छ । समूह 'ए' मा रहेको नेपालसहित सिंगापुर, इन्डोनेसिया, भुटान तथा जापान रहेका छन् । त्यस्तै, समूह 'बी' मा आयोजक मलेसिया सहित हङकङ, माल्दिभ्स, थाइल्याण्ड तथा म्यानमार रहेका छन् ।

नेपालले तेस्रो खेलमा आइतवार इन्डोनेसियासँग खेल्नेछ । समूह चरणको अन्तिम खेलमा नेपालले भुटानको सामना गर्नेछ ।

हरेक समूहबाट विजेता र उपविजेता सेमिफाइनल प्रवेश गर्नेछन् । प्रतियोगिताको फाइनल ५ जुलाई (असार २१) मा हुनेछ । नेपाल प्रतियोगिताको यसअघिका तीनै संस्करणको च्याम्पियन हो ।

## सुशासनको....

यो समितिले तीन महिनाभित्र नेपाल सरकार समक्ष प्रतिवेदन बुझाउनुपर्नेछ। समितिमा दोषी भनिएका मन्त्रालयकै अधिकारीहरू समावेश भएकाले निष्पक्ष छानबिन हुने सम्भावना न्यून देखिएको छ। सरकारले जानीजानी प्रश्न उठ्ने गरी समिति बनाएको र माओवादीले पनि यसलाई स्वीकार गरेबाट राजनीतिक लेनदेन प्रष्ट भएको देखिन्छ।

विगतका गृहमन्त्रीहरू पनि छानबिनको दायरामा आउने भए पनि अहिलेको गृहमन्त्री रमेश लेखकमाथि गृह मन्त्रालयकै सहसचिवले कसरी छानबिन गर्लान् भन्ने प्रश्न उब्जिएको छ। यसले यो प्रकरण यत्तिकै सेलाएर जाने र एक-दुई कर्मचारीसम्म मात्र दोषी देखाइन सक्ने आशंका गरिएको छ।

निष्पक्ष छानबिनका लागि पूर्व वा बहालवाला न्यायाधीशको अध्यक्षतामा न्यायिक समिति वा समाजमा साख भएको प्राज्ञिक व्यक्तित्वको नेतृत्वमा विज्ञहरूको समिति गठन हुनुपर्ने माग गरिएको छ। अन्यथा, यो प्रकरणले भविष्यमा ठूला दलहरूलाई पनि अप्ठ्यारो पार्ने सक्ने चेतावनी दिइएको छ।

यो प्रकरणले के देखाउँछ भने जब शक्तिमा रहेका व्यक्तिहरूको स्वार्थ बाझिन्छ, तब न्याय र पारदर्शिताको आशा कमजोर हुँदै जान्छ । यसले नेपालको सुशासन र जवाफदेही प्रणालीमा गम्भीर प्रश्नहरू खडा गरेको छ ।

## मध्यपुर थिमि...

छ । कार्यालय सञ्चालन तथा प्रशासनिक खर्चः यस शीर्षकमा रु. २३ करोड ३३ लाख ३५ हजार विनियोजन गरिएको छ।

गौरवका योजना र प्राथमिकता

नगरपालिकाले नगर गौरवका योजनाहरू र दीर्घकालीन योजनाहरूलाई बजेट अभाव हुन नदिने गरी प्राथमिकता दिएको छ। जसमा धार्मिक तथा सम्पदा पर्यटन प्रबर्द्धनका लागि सम्पदा पदमार्ग निर्माण, नगरपालिका र दुई वटा वडाको प्रशासनिक भवन निर्माण, निलबाराही वन क्षेत्र, दुनेगः, वनदेवी, भाँगु लगायतका क्षेत्रमा पहिरो नियन्त्रण, शंखधर गुरुयोजना, बालकुमारी उकालो सौन्दर्यकरण, वनदेवी परिसर सौन्दर्यकरण, लायकु दरबार पुनर्निर्माण, भाँगु महालक्ष्मी मन्दिर परिसर गुरुयोजना कार्यान्वयन, हिरण्यवर्ण महाविहारसहित थिमिका तीन ऐतिहासिक विहारको पुनर्निर्माण, जात्रा पर्व, कला, संस्कृति, मूर्त-अमूर्त सम्पदाको जगेर्ना तथा पर्यटन प्रबर्द्धन, खुल्ला क्षेत्र तथा सार्वजनिक स्थलको संरक्षण र उपयोगिता सिर्जना, शिक्षा, स्वास्थ्य, खेलकुद क्षेत्रको विकास, सडक सरसफाइ उपकरण खरिद र रोजगारी तथा व्यावसायिकता सिर्जनाका लागि तालिमको व्यवस्था समावेश छन्।

चालु आर्थिक वर्षको समीक्षा

चालु आर्थिक वर्ष २०८१/०८२ को जेठ मसान्तसम्ममा पुँजीगत खर्च ३६.७८ प्रतिशत र चालु खर्च ६०.८० प्रतिशत रहेको छ। आन्तरिक राजस्व संकलनमा सुधार आएको र कर योग्य आयमा बढोत्तरी भएको बताइएको छ। चालु आर्थिक वर्षमा सम्पत्ति कर, भूमिकर, घरबहाल कर, विज्ञापन कर, मनोरन्जन कर, व्यवसाय कर र विविध सेवा शुल्क दस्तुरबाट कुल रु. २३ करोड ८० लाख ४३ हजार ३ सय ७८ संकलन भएको छ।

प्रमुख उपलब्धिहरू

मध्यपुर थिमि नगरपालिकाले निलबाराही क्षेत्र संरक्षणका लागि डीपीआर तयार गरी निर्माण कार्य अगाडि बढाएको छ। लामो समयदेखि रोकिएको नक्सापासलाई व्यवस्थित गरिएको छ भने हनुमन्ते खोलामा हुने डुबान नियन्त्रणका लागि खोला सरसफाइ र वाल निर्माण गरिएको छ। सामाजिक क्षेत्रमा छात्रवृत्ति, स्वास्थ्य बीमा, पोषण र सशक्तीकरण कार्यक्रम सञ्चालन गरिएको छ। नगरपालिकाले स्मार्ट लाइट, सम्पदा मार्ग, नयाँ वडा कार्यालय भवन निर्माण, उद्यम, सीप विकास तथा रोजगारी कार्यक्रम लगायतका कामहरू गरेको छ। सूचना प्रवाहमा उत्कृष्ट कार्य गरेबापत राष्ट्रिय सूचना आयोगद्वारा सम्मानित भएको र वातावरण, संस्कृति र पर्यटनको क्षेत्रमा उत्कृष्ट कार्य सम्पादनको आधारमा नेपाल नगरपालिका संघबाट देशकै उत्कृष्ट नगरपालिकाको रूपमा सम्मानित भएको उपप्रमुख श्रेष्ठले बताए।

नेपाल कोरियामैत्री नगरपालिका अस्पतालको भवन निर्माण भइरहेको छ भने ३४०९ परिवारको निःशुल्क स्वास्थ्य बीमा गरिएको छ। ज्येष्ठ नागरिक सु-स्वास्थ्य कार्यक्रमअन्तर्गत महिनाको २ दिन प्रत्येक वडामा स्वास्थ्य शिविर सञ्चालन गरी २०७९ जनालाई सेवा प्रदान गरिएको छ। यस आर्थिक वर्षमा कुल १३,१८४ जना नगरवासीलाई स्वास्थ्य सेवा तथा जनचेतनामूलक कार्यक्रम आयोजना गरिएको छ। आर्थिक वर्ष २०८०/८१ मा भक्तपुर जिल्लाकै न्यून बेरुजु भएको पालिकाको रूपमा मध्यपुर थिमि देखिएको छ।

अन्तर सरकारी अख्तियारीमा सामाजिक सुरक्षा भत्ताका लागि २२ करोड, सडक बोर्ड नेपालका लागि ७० लाख, सिन्टिटार जग्गा आयोजनाका लागि २० करोड ४० लाख १७ हजार १ सय, कमेरोटार जग्गा आयोजनाका लागि ७० करोड २३ लाख १३ हजार ७ सय र नेपाल कोरिया मैत्री नगर अस्पतालका लागि ६० करोड ३२ लाख ५५ हजार ८ सय गरी कुल रु. ३ अर्ब २५ करोड ६६ लाख ७० हजार विनियोजन गरिएको छ।

८ नगरस्तरीय क्रमागत योजनाका लागि २० करोड, प्रत्येक वडालाई २ करोड १ लाखका दरले कुल १८ करोड ९ लाख, नेपाल सरकारबाट प्राप्त समपूरक अनुदानबाट सञ्चालन हुने योजनाका लागि ९ करोड ३४ लाख, बागमती प्रदेश समपूरक अनुदानबाट सञ्चालन हुने योजनाका लागि ५ करोड उनान्चास लाख र संघीय तथा प्रदेश सरकारबाट प्राप्त हुने ससर्त अनुदानबाट सञ्चालन हुने योजनाका लागि ९ करोड ९७ लाख बजेट विनियोजन गरिएको छ। यसैगरी, ससर्त अनुदानको चालु खर्चतर्फ २८ करोड ३७ लाख ८ हजार विनियोजन गरिएको छ।

यस बजेटले मध्यपुर थिमि नगरपालिकालाई समृद्ध र सुशासनयुक्त बनाउँदै सम्पदा, संस्कृति संरक्षण, रोजगारी सिर्जना, व्यवसायिकताको विकास, पूर्वाधार निर्माण, सरसफाइ, हरियाली प्रबर्द्धन, पर्यावरण सन्तुलन, आत्मनिर्भर अर्थतन्त्र, गुणस्तरीय शिक्षा, सर्वसुलभ स्वास्थ्य उपचार, सामाजिक विकास, युवा रोजगार, बालबालिका र अपाङ्गतामैत्री समावेशी नगर बनाउने लक्ष्य राखेको छ।

## ओली....

उनले सरकारको सम्पूर्ण ध्यान सत्ता जोगाउने, पद बाँडफाँड गर्ने, प्रशासन हल्लाउने र जनताको नाममा बजेट बेच्ने काममा केन्द्रित रहेको बताए। "सुशासन कुन चराको नाम हो, सरकारलाई थाहा छैन," यादवको आरोप थियो, "गरीब, श्रमिक र किसानलाई बजेटमा पन्छाइएको छ, बजेट नै बिचौलियामुखी बनेको छ।"

संविधान र संघीयताप्रति सरकार उदासीन रहेको भन्दै यादवले संघीयताको मर्ममाथि नै आक्रमण भइरहेको आरोप लगाए। प्रदेश सरकारलाई कर्मचारी, स्रोतसाधन नपठाउने, कानुन निर्माणमा ढिलाइ गर्नेजस्ता कामहरूले संघीयताको भविश्य असुरक्षित बनेको उनको भनाइ थियो।

अर्थतन्त्रको अवस्था दिनप्रतिदिन कमजोर बन्दै गएको भन्दै यादवले उत्पादन कमजोर भएको, देश आयातमुखी बनेको र कुल ऋण अढाई खर्ब नाघेको जानकारी दिए। "रेमिट्यान्सले चलेको प्रणाली दीर्घकालीन हैन, अब योजना, श्रम र विकासलाई केन्द्रमा राखेर देश चलाउनुपर्छ," उनले बताए।

राजनीतिक नेतृत्व पुरानो सोच र सत्ता मोहमा सीमित रहेको भन्दै यादवले अब देश युवाले नेतृत्व गर्ने बेला आएको स्पष्ट पारे। "उस्तै अनुहारले देश थला परेको छ, बहस हुनुपर्छ–अब देश कसले चलाउने ? कुन बाटो जाने ?" उनले प्रश्न गरे।

अध्यक्ष यादवको घोषणा संगै जसपा सरकारबाट औपचारिक रुपमा अलग हुने भएको छ।

## दुई ब्यानर....

एउटै कार्यक्रममा दुई फरक ब्यानर र उद्घाटन

तीन दिने मेला असार ८ गते साँझ समापन हुनुपर्नेमा, उक्त दिन बिहानै कार्यक्रमको ब्यानर परिवर्तन गरी अर्को कार्यक्रमको उद्घाटन गरिएको पाइएको छ । "भक्तपुर औद्योगिक प्रवर्धन व्यापार मेला" को ब्यानरको सट्टा "स्थानीय सीप तथा उत्पादन व्यापार एवं खाना महोत्सव २०८२" को ब्यानर राखिएको थियो । यो दोस्रो कार्यक्रमको उद्घाटनका लागि नेमकिपाकै बागमती प्रदेश सभा सदस्य सृजना सैंजुलाई प्रमुख अतिथि बनाइएको थियो । चलिरहेको एउटै कार्यक्रममा यसरी ब्यानर र प्रमुख अतिथि परिवर्तन गरी किर्ते काम गरेको आरोप सङ्घमाथि लागेको छ ।

बजेट दुरुपयोग र कमिसनको खेलको आरोप

बागमती प्रदेश उद्योग मन्त्रालयबाट चालू आर्थिक वर्षमा भक्तपुर उद्योग वाणिज्य सङ्घमार्फत व्यापार प्रवर्धन कार्यक्रमका लागि बजेट विनियोजन भएको थियो । यस्तै, चाँगुनारायण नगरपालिकाबाट समेत भ्रमण वर्षको नाममा पैसा असुल्ने प्रयास भएको आरोप छ । तीन दिनका लागि तोकिएको कार्यक्रमलाई दुई दिन मात्र चलाएर तेस्रो दिन ब्यानर र अतिथि बदली बजेट पचाउने प्रयास गरेको देखिन्छ ।

यस प्रकारको किर्ते कार्यबारे नेमकिपाका दुवै सांसदले जानकारी पाउन नसकेको र उद्योग तथा वाणिज्य कार्यालय भक्तपुरले समेत आँखा चिम्लिएको भन्दै आलोचना भएको छ । आरोप अनुसार, कमिसनको खेलमा कार्यालयले मौनता साँधेको र गत साउनदेखि नै कार्यान्वयन हुनुपर्ने कार्यक्रम असारको अन्तिम समयमा हतार-हतारमा सम्पन्न गरी किर्ते गरेको छ ।

न्यून प्रचारप्रसार र असन्तुष्ट व्यापारी

व्यवसायिक कृषि, दिगो पर्यटन, निर्यातमुखी हस्तकला र जिल्लाका अन्य उद्योग व्यवसायको प्रवर्धनका लागि भनिएका उक्त कार्यक्रमको प्रचारप्रसार अत्यन्तै कम थियो । सीमित व्यापारीहरूलाई जम्मा गरेर सानो पार्टी प्यालेसमा गरिएको कार्यक्रम बजेट पचाउने उद्देश्यले मात्र भएको स्पष्ट देखिन्थ्यो ।

स्टल राख्ने व्यापारीहरूका अनुसार, तीन दिन चलेको कार्यक्रम हेर्न १ हजार जना पनि आएनन् । उनीहरूले न त व्यापार नै भयो न त प्रचार नै भयो भन्दै गुनासो गरे । "उद्योग वाणिज्य सङ्घलाई बजेट पचाउन दुई कार्यक्रम एकै स्थानमा एकै पटक ब्यानर परिवर्तन गरी फोटो खिचाएर कार्यालयमा पेस गरे पुग्ने रहेछ, हामी त चिल्लै पर्यौं, फोकटमा पैसा मात्र खर्च भयो," एक स्टलधनीले गुनासो पोखे ।

राष्ट्रिय स्तरमा पनि दुरुपयोगको प्रवृत्ति

देशभर सङ्घ, प्रदेश र स्थानीय निकायबाट व्यापार मेला तथा प्रवर्धन कार्यक्रम शीर्षकमा वर्षेनि करोडौं रुपैयाँ बजेट विनियोजन हुने गरेको छ । तर, यी कार्यक्रमबाट हालसम्म कुनै ठोस उपलब्धि हुन सकेको छैन । भक्तपुर उद्योग वाणिज्य सङ्घ जस्ता संस्थाहरूले मेला महोत्सवको बहानामा सरकारी बजेटको दुरुपयोग गर्दै आएको आरोप छ ।

यी मेलाहरूमा देशभरबाट एकै किसिमका व्यापारीहरूको संलग्नता देखिन्छ । उनीहरू एक जिल्लाबाट अर्को जिल्लामा सर्दै देशभर घुम्ने गरेका छन्, र उनीहरूको साथ लिएर विभिन्न सङ्घसंस्थाहरूले सरकारी पैसाको दुरुपयोग गर्ने गरेका छन् ।

भारतीय र बङ्गलादेशी व्यापारीको सहभागिता र घाटा

भक्तपुर उद्योग तथा वाणिज्य सङ्घले आयोजना गरेको उक्त मेलामा भारतीय तथा बङ्गलादेशी व्यापारीहरूको पनि स्टल सहभागिता थियो । उनीहरूबाट प्रत्येक स्टलका लागि १० हजार रुपैयाँका दरले भाडा समेत उठाइएको थियो । नेपाल सरकार तथा स्थानीय निकायको बजेट लिई गरिएको कार्यक्रममा स्टल राख्नेसँग पैसा उठाएपनि भाडा बराबरको व्यापार समेत नभएकोमा उनीहरूले दुःख व्यक्त गरे । साना तथा मझौला उद्योगहरूको प्रवर्धन गर्ने हेतुले सञ्चालन भएको भनिएको उक्त मेलाको उपलब्धि शून्य भएको जानकारहरू बताउँछन् । उनीहरूका अनुसार, यस्ता मेलाले व्यापार प्रवर्धनभन्दा पनि सीमित व्यापारी र आयोजकलाई मोटाउने काम मात्र हुने गरेको छ ।

यसरी भक्तपुर उद्योग वाणिज्य सङ्घ जस्ता कार्यालयले गरेको नीतिगत भ्रष्टाचार लाई साथ दिएमा नेपालमा घरेलु उत्पादन तथा व्यापारमा कुनै परिवर्तन नआउने र उनीहरूले बर्सेनि यस्ता कार्यक्रमका नाममा राजस्व कुम्ल्याउने भएकाले यस्ता कार्यको विरोध गर्नु जरुरी रहेको छ । यस्ता अनियमितताले स्थानीय व्यापार र राष्ट्रिय अर्थतन्त्रमा कस्तो असर पर्छ जस्तो लाग्छ ?

## चाँगुनारायणको....

र जैविक मलको प्रयोग बढाउने नगरपालिकाको योजना छ ।

पूर्वाधार विकासतर्फ नगरका ९ वटै वडालाई नगरपालिका कार्यालयसँग जोड्ने सडक सञ्जाल र खासाङखुसुङ खोला-नगरपालिका भवन-घट्टेखोला नयाँ करिडोर निर्माण कार्यलाई आर्थिक वर्ष २०८२/०८३ भित्रै सम्पन्न गरिने घोषणा गरिएको छ । सुशासन र प्रविधिमैत्री सेवा

सार्वजनिक सेवा प्रवाहलाई प्रविधिमैत्री बनाउन नगरपालिकाले विशेष जोड दिएको छ । नगरको वेबसाइटमा कृत्रिम बुद्धिमत्ता (एआई) मा आधारित च्याटबट प्रणाली स्थापना गरी नागरिकलाई २४/७ डिजिटल सहायता प्रदान गरिनेछ । सबै वडामा 'डिजिटल हेल्प डेस्क' स्थापना गर्ने, फाइल ट्र्याकिङ सिस्टम लागू गर्ने र अनलाइन सेवालाई थप प्रभावकारी बनाउने नीति लिइएको छ । भ्रष्टाचारविरुद्ध शून्य सहनशीलता अपनाउँदै प्रमुख प्रशासकीय अधिकृत र शाखा प्रमुखहरूबीच कार्यसम्पादन सम्झौता लागू गरिनेछ ।

सामाजिक विकास र समावेशीकरण

सामाजिक क्षेत्रतर्फ, "बचत खाता छोरीको, सुरक्षा जीवनभरीको" कार्यक्रमलाई निरन्तरता दिँदै छोराहरूका लागि पनि बचत खाता कार्यक्रम सञ्चालन गरिने भएको छ । महिलाहरूमा बढ्दो स्तन क्यान्सर रोकथामका लागि निःशुल्क स्वास्थ्य जाँचको व्यवस्था मिलाइनेछ भने चाँगुनारायण अस्पतालमा विशेषज्ञ सेवा थप प्रभावकारी बनाइनेछ । विपन्न नागरिकलाई रोजगारमूलक सीप प्रदान गर्ने र महिला, ज्येष्ठ नागरिक तथा अपाङ्गता भएका व्यक्तिहरूको सशक्तीकरणका लागि विशेष कार्यक्रम सञ्चालन गरिनेछ ।

यसका साथै, राजश्वको दायरा बढाउने, विपद् व्यवस्थापनलाई समुदायस्तरसम्म लैजाने, विद्यालय शिक्षामा सुधार गर्ने र स्थानीय उत्पादनलाई प्रवर्द्धन गर्ने जस्ता नीतिहरू पनि नगरपालिकाले अघि सारेको छ । सम्पूर्ण नीति तथा कार्यक्रमहरू नगरपालिकाको प्रथम पञ्चवर्षीय आवधिक योजना र मध्यकालीन खर्च संरचनाअनुसार कार्यान्वयन गरिने जनाइएको छ ।

त्यस्तै चाँगुनारायण नगरपालिकाले आगामी आर्थिक वर्ष २०८२/०८३ का लागि १ अर्ब ८४ करोड ५६ लाख २० हजार ४१३ रुपैयाँको बजेट सार्वजनिक गरेको छ । उप-प्रमुख रमेश बुढाथोकीले नगरसभाको सत्रौं अधिवेशनको पहिलो बैठकमा बजेट तथा कार्यक्रम प्रस्तुत गर्दै नगरको दिगो विकास, पूर्वाधार विस्तार र जनसेवा अभिवृद्धिमा केन्द्रित रहेर बजेट तर्जुमा गरिएको जानकारी दिए ।

संघीय र प्रदेश सरकारबाट प्राप्त अनुदान तथा नगरपालिकाको आन्तरिक स्रोतमा आधारित बजेटले "कृषि, पर्यटन र सामाजिक पूर्वाधारः समृद्ध चाँगुनारायणको मूल आधार" भन्ने नारालाई आत्मसात् गर्दै नीतिगत प्राथमिकताहरू निर्धारण गरिएको उल्लेख गरिएको छ ।

बजेट प्रस्तुत गर्दै बुढाथोकीले प्रमुख पर्यटकीय गन्तव्य नगरकोट सडकको कालोपत्रे कार्य, सबै वडा कार्यालय जोड्ने सडक सञ्जाल विस्तार, खेलकुद पूर्वाधार, स्वच्छ खानेपानी, स्वास्थ्य सेवा सुधार, उद्यमशीलता प्रवर्द्धन, पर्यटन विकास, सुशासन र डिजिटल सेवा विस्तारमा केन्द्रित कार्यक्रमहरु समावेश गरिएको बताए ।

उपप्रमुख बुढाथोकीले नगरपालिकाको आन्तरिक आय स्रोतका रूपमा सिफारिस दस्तुर, व्यवसाय दर्ता, घरनक्शा पास दस्तुर लगायतबाट ३० करोड ५५ लाख अनुमान गरिएको जानकारी दिए। त्यस्तै संघीय सरकारबाट प्राप्त हुने अनुदान र राजस्व बाँडफाँटबाट ८४ करोडभन्दा बढी रकम आउने अपेक्षा गरिएको छ ।

चालु आर्थिक वर्षको २ अर्ब १२ करोडको बजेटमध्ये हालसम्म ५३.७८ प्रतिशत खर्च भइसकेको जानकारी दिँदै बुढाथोकीले पूँजीगत खर्चमा अझै वृद्धि हुने विश्वास व्यक्त गरे । नगरकोट भ्रमण वर्ष २०८२ सफल पार्न आवश्यक कार्यक्रमहरूका लागि समेत छुट्टै बजेट व्यवस्था गरिएको छ ।

आर्थिक, सामाजिक, शैक्षिक, स्वास्थ्य, पूर्वाधार र प्रशासनिक क्षेत्रका उपलब्धिहरूको समेत संक्षिप्त विवरण प्रस्तुत गर्दै उनले आगामी वर्षको बजेटबाट जनताको सेवा र समृद्धिको चाहना पूरा गर्न सकिने विश्वास व्यक्त गरे ।

वर्ष १८ अङ्क ४१ २०८२ असार ११ गते बुधबार
25 June 2025, Wednesday
इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# चलचित्र "कोशेढुङ्गा"–नेपालसहित ४० देशमा रिलिज हुँदै




काठमाडौं । आगामी भदौ १२ गतेदेखि प्रदर्शन हुने चलचित्र 'कोशेढुंगा' नेपालसहित ४० भन्दा धेरै देशमा एकसाथ रिलिज हुने भएको छ ।

सर्वकालीन ब्लकबस्टर चलचित्र 'पूर्ण बहादुरको सारङ्गी' फेम्ड निर्देशक सरोज पौडेलको निर्देशनमा निर्माण भएको चलचित्र 'कोशेढुंगा' नेपालसँगै अमेरिका, अस्ट्रेलिया, जापान, युके, क्यानडालगायत ४० भन्दा धेरै देशमा प्रदर्शन हुनेछ ।

चलचित्र 'कोशेढुंगा'लाई प्याट्रिक सुवेदी र रमेश ढकालको सेभेन सिज इन्टरनेसनलले अन्तर्राष्ट्रिय बजारमा वितरण गर्दैछ । सेभेन सिजले यो फिल्म सो मितिमा देश तथा विदेशमा एकसाथ प्रदर्शनमा आउने निर्माण कम्पनीले जनाएको छ ।

"हाम्रो चलचित्र ४० भन्दा धेरै देशमा एकसाथ रिलिज हुनेछ । अन्य देशमा पनि रिलिजका लागि वितरकहरूसँग कुरा भइरहेको छ," निर्देशक पौडेलले भने, "रिलिजको समयसम्म अन्य केही देश पनि थपिनेछन् ।"

डायस्पोरामा नेपाली सिनेमाकै इतिहासमा पहिलो पटक 'कोशेढुंगा' एकसाथ ४० देशमा आगामी भदौ १२ गते (अगस्ट १८ मा) एकसाथ ४० देशका हलहरूमा रिलिज गर्न लागिएको अन्तर्राष्ट्रिय वितरक कम्पनी सेभेन सिज इन्टरनेसनलका निर्देशक रमेश ढकालले जानकारी दिएका छन् ।

नेपाली सिनेमाको डायस्पोरा इतिहासमा पहिलो पटक यति धेरै देशमा एकसाथ चलचित्र प्रदर्शन हुँदा 'कोशेढुंगा'ले नेपाली सिनेमालाई अन्तर्राष्ट्रिय स्तरमा नयाँ उचाइ दिने अपेक्षा वितरक ढकालको छ ।

निर्देशक पौडेलको निर्देशन रहेको यो चलचित्र 'कोशेढुंगा'को छायांकन स्याङ्जाको आधिखोला, त्रिवेणी र सिरुवारी क्षेत्रमा गरिएको छ। काठमाडौंमा पनि सेट लगाएर यो सिनेमाको छायांकन गरिएको छ । गाउँले सेटअपमा यो सिनेमाले मौलिक कथा पस्किनेछ ।

यो चलचित्रको केही समयअघि पोस्टरमा अभिनेत्री पन्तलाई प्रस्तुत गरिएको गाउँको पृष्ठभूमिमा पछ्यौरी ओढेको ग्रामिण महिलाको चरित्रमा फिचर्ड गरिएको फस्टलुक पोस्टर सार्वजनिक गरिएको थियो ।

नरदेवी फिल्मसको प्रस्तुति रहेको चलचित्र 'कोशेढुंगा'मा अभिनेत्री सुरक्षा पन्त, आर्यन सिग्देल, ऋचा शर्मा, मन्जिल कुमार, नीति शाह, प्रवीण खतिवडा, हिउवाला गौतम, सरोज खनाल, विशाल पहाडी, दिनेश काफ्ले, लोकमणि सापकोटालगायतको अभिनय रहेको छ ।

चलचित्रको निर्मातामा प्रेविल कँडेल र किशोर अनुराग छन् । कार्यकारी निर्माता दिनेश खड्का हुन् । बाबु श्रेष्ठले छायांकन गरिरहेको यो चलचित्रमा नहकुल खड्काको सम्पादन, आशिष अविरल र रिदम कँडेलको संगीत छ । यस चलचित्रको कास्टिङ डिरेक्टर सुवलमणि सापकोटा हुन् ।

# ओटीटीमा हेर्नुस् "स्क्विड गेम"सहित १२ कोरियन फिल्म



सियोल । दक्षिण कोरियाली फिल्म र सिरिज पछ्याउने दर्शकलाई यससाता निकै रोचक हुनेवाला छ । किनकी ओटीटी प्लाटफर्ममा यससाता बहुप्रतीक्षित सिरिज र फिल्म आउँदैछन् ।

शुक्रबारदेखि 'स्क्विड गेम'को तेस्रो तथा अन्तिम सिजन नेटफ्लिक्समा आउँदैछ । विश्वभर नै प्रतीक्षा गरिएको यो सिरिज नेपाली दर्शकमाझ पनि प्रतीक्षित छ ।

हल्का फ्यान्टासी र प्रेमकथा रुचाउने दर्शकको लागि 'हेड ओभर हिल्स', र 'लभ फोबिया' पनि आउँदैछन् । समग्रमा, यससाता रोमान्स, थ्रीलर, ड्रामादेखि रहस्यका कथासम्मका कोरियाली सिरिज आउनेछन् । हेर्नुस सूची :

हेड ओभर हिल्स (२३ जुन)

कोरियाली फ्यान्टासी ड्रामा 'हेड ओभर हिल्स' मा हाईस्कूलकी एक छात्रा शम्यानको कथा प्रस्तुत गरिएको छ, जसले आफ्नो मन पराएको केटालाई मृत्युको भविष्यवाणीबाट बचाउन प्रयास गर्छे । चो यि ह्युन र चु यङ उ मुख्य भूमिकामा देखिने यो शृंखला रहस्य, प्रेम र आत्मबलको कथासँग भरिएको छ । यो नयाँ रोमान्चक श्रृंखला २३ जुन बाट सुरु हुँदैछ ।

'स्क्विड गेम' सिजन ३ (२७ जुन)

दर्शकमाझ तहल्का मच्चाएको 'स्क्विड गेम' अब आफ्नो तेस्रो तथा अन्तिम सिजनमा प्रवेश गर्न लागेको छ । लि जुंग जे र लि ब्युङ हुनबीचको अन्तिम टकराव, नयाँ खेल, नयाँ संघर्ष र भावनात्मक उथलपुथलले यो सिजन थप रोचक हुने अपेक्षा गरिएको छ । नेटफ्लिक्समा २७ जुनदेखि प्रसारण हुने यो शृंखला सन् २०२५ को सबैभन्दा बहुप्रतिक्षित के-ड्रामामध्ये एक हो ।

लभ फोबिया (२७ जुन)

'लभ फोबिया'मा एउटा प्रविधि कम्पनीको सीईओ (किम ह्युन जिन) र एक रोमान्स उपन्यासको लेखिका (योन उ) को कथा देखिन्छ, जसले एउटै एपमा सहकार्य गर्ने क्रममा प्रेम र द्वन्द्वको अनुभव गर्छन् । लभ-हेट रिलेसनसिप र प्रविधि संसारको पृष्ठभूमिमा बनेको यो सिरिज यु प्लस मोबाइल टिभी र हाइ टिभीमा २७ जुन मा आउनेछ ।

सलोन दे होम्स (जुन २३-२४)

समाजका समस्या सुल्झाउने एक अनौठो टोलीको कथा हो 'सलोन दे होम्स' । लि सी यङ र जङ यङ जु मुख्य भूमिकामा रहेका यो शृंखलामा टोलीले आफ्ना छिमेकीको समस्या समाधानमा सामूहिक प्रयास गर्छ । एपिसोड ३ र ४ इएनए च्यानलमा २३ र २४ जुन मा स्ट्रिम हुँदैछन् ।

हन्टर विथ अ स्काल्पेल (२३-२६ जुन)

सिरियल किलिङको रहस्य सुल्झाउने कथा लिएर आएको छ 'हण्टर विथ अ स्काल्पेल' । काङ हुन र पार्क जु ह्युनको जोडीले अपराधको भयानक चक्रभित्र पसेका पात्रको कथा बुनेको छ । एपिसोड ६ देखि ९ सम्म डिज्नी र यु प्लस मोबाइल टिभी र मा २३ देखि २६ जुन सम्म हेर्न सकिन्छ ।

द वुमन हू स्वालोड द सन (२३-२७ जुन)

'द वुमन हू स्वालोड द सन'मा एक आमाको न्याय खोजीको कथा छ, जसले आफ्नो छोरीका लागि शक्तिशाली चाबोल परिवारसँग बदला लिन्छिन् । चाङ सिन यङले मुख्य भूमिका निर्वाह गरेकी यो शृंखला कोचोवा मा २३ देखि २७ जुन सम्मका एपिसोड आउँदैछन् ।

आवर मुभी (२७-२८ जुन)

चलचित्र निर्माणको दौरानमा बढ्दै गएको प्रेमको कथा हो 'आवर मुभी' । जन यो बिन र नामगुङ मिन अभिनित यो शृंखलामा सृजनात्मकता र भावना सँगसँगै अगाडि बढ्छ । एपिसोड ५ र ६ २७ र २८ जुन मा प्रसारण हुनेछ ।

स्प्रिङ अफ युथ (२५ जुन)

'स्प्रिङ अफ युथ'मा ब्याण्ड सुधार गर्ने संघर्ष र अधुरो प्रेमको कथा छ । हा यु जुन, पार्क जी हु र ली सेउङ ह्युपको अभिनय रहेको यो शृंखला २५ जुन मा प्रसारण हुनेछ ।

द फर्स्ट नाइट विथ द ड्युक (२५-२६ जुन)

यो प्रेमकथामा ओक टेक यनको पात्रले सियो ह्युनलाई बचाउन अनेक संघर्ष गर्छ । त्यस क्रममा उनीहरूबीचको प्रेम अझै गहिरिन्छ । एपिसोड ५ र ६ २५ र २६ जुनमा रिलिज हुँदैछन् ।

ओ माई घोस्ट क्लायन्ट्स (२७-२८ जुन)

जङ क्युङ हो, सोल इन आ र चा हाक यनले आत्माहरूको कानुनी मुद्दा सुल्झाउँदै जीवनको अर्थ खोज्ने कथा हो 'ओ माई घोस्ट क्लायन्ट्स' । एपिसोड ९ र १० २७ र २८ जुनमा आउनेछन् ।

गुड ब्वाई (२८-२९ जुन)

'गुड ब्वाई' मा पार्क बो गम र उनकी टोलीले अपहरणमा परेकी किम सो ह्युनलाई बचाउने साहसिक मिशनमा लाग्छन् । यो सिरिज २८ र २९ जुन मा स्ट्रिम हुनेछ ।आवर अनरिटन सोल (२८-२९ जुन)

पार्क बो यङ अभिनीत यो शृंखलामा दुई जुम्ल्याहा पात्रले जिनयङ र युँ क्युङ सुसँगको सम्बन्ध सम्हाल्ने प्रयास गर्छन् । प्रेम, पहिचान र आत्मसंघर्षको कथा बोकेको यो ड्रामा २८ र २९ जुन मा नेटफ्लिक्समा आउनेछ ।

# लिम्बु फिल्म "चे" लाई आदिवासी जनजाति चलचित्र महोत्सवमा दुई प्रमुख अवार्ड

काठमाडौं। लिम्बु भाषामा निर्माण गरिएको चलचित्र ' चकक' ले यस वर्षको पाँचौं आदिवासी जनजाति चलचित्र महोत्सवमा सर्वोत्कृष्ट चलचित्र तथा सर्वोत्कृष्ट निर्देशनको उपाधि हात पार्न सफल भएको छ। सागर केरुङ निर्देशित उक्त चलचित्रले मौलिकता, भाषा र संस्कृतिको गहिरो प्रस्तुति दिएको भन्दै निर्णायक मण्डलले उच्च मूल्यांकन गरेको हो।

चलचित्र विकास बोर्डको सभाहलमा आयोजित समापन समारोहलाई आइतबार सम्बोधन गर्दै सञ्चार तथा सूचना प्रविधिमन्त्री पृथ्वी सुब्बा गुरुङले चलचित्र केवल मनोरञ्जनको माध्यम नभएर भाषा, कला र संस्कृतिको संरक्षणको सशक्त साधन पनि भएको बताए। उनले मातृभाषाको प्रयोगमार्फत चलचित्र, साहित्य र सङ्गीतको विकास गर्नुपर्नेमा जोड दिँदै भने, "हामी सबैको साझा भाषा नेपाली भए पनि प्रत्येक जातजातिको आफ्नै भाषा, संस्कृति छ। ती भाषा र संस्कृतिलाई अगाडि बढाउनु हाम्रो कर्तव्य हो।"

उनले हाल राष्ट्रिय सभामा छलफलको क्रममा रहेको ' चलचित्र नीति'मा आदिवासी जनजातिको चलचित्र प्रवर्द्धनका लागि आवश्यक प्रावधानहरू समेटिने प्रतिबद्धता पनि व्यक्त गरे।

'आदिवासी जनजाति चलचित्रको प्रवर्द्धन, मौलिक भाषा र संस्कृतिको संरक्षण' भन्ने नाराका साथ सुरु भएको महोत्सवमा विभिन्न समुदायका मौलिक चलचित्रहरू प्रस्तुत गरिएका थिए। असार ६ गतेदेखि तीन दिनसम्म चलेको महोत्सवमा विभिन्न जातीय भाषा र संस्कृतिमा आधारित चलचित्रहरू प्रदर्शन गरिएका थिए।

महोत्सवमा मगर भाषाको 'ट्याङ्चलाक' का लेखक मेक बहादुर पुन मेजनलाई सर्वोत्कृष्ट पटकथाकारको पुरस्कार प्रदान गरिएको छ भने गुरुङ भाषाको 'मि थोङ' का लागि राज बहादुर गुरुङ 'राजेश' ले सर्वोत्कृष्ट छायांकन पुरस्कार प्राप्त गरे।

त्यस्तै, नेवार समुदायको 'थ्रिकिंग सिभिलाइजेशन अफ काठमाडौं भ्याली' लाई सर्वोत्कृष्ट डकुमेन्ट्री र मगर भाषाको 'खिल' लाई सर्वोत्कृष्ट छोटो चलचित्र (शर्ट फिल्म) को रूपमा सम्मान गरियो।

महोत्सव आदिवासी जनजाति चलचित्र महासंघको आयोजनामा भएको हो। महासंघका कार्यवाहक अध्यक्ष भुइसाल लामाको अध्यक्षतामा सम्पन्न समापन कार्यक्रममा चलचित्र विकास बोर्डका अध्यक्ष दिनेश डिसी, महोत्सव निर्देशक प्रतिमाया पुन मगर, महासंघका पूर्व अध्यक्ष अमृत सुनवार, पूर्व सांसद रिता माझी लगायतले मन्तव्य व्यक्त गरेका थिए।

निर्णायक मण्डलमा वरिष्ठ पत्रकार विजयरत्न तुलाधर, नेपालको पहिलो महिला छायाँकार शबनम मुखिया र तामाङ चलचित्र निर्देशक हिरालाल ब्लोन रहेका थिए।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

THIMI TIMES WEEKLY




वर्ष १८ अङ्क ४२ ने.सं. ११४५ दिल्लाथ्व सप्तमी असार १८ गते बुधबार, २०८२ 02 July 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

# बागमतीको जल प्रवाहको बेवास्ताले डुबानमा उपत्यका, दोष चोभार गल्छीलाई




काठमाडौं । काठमाडौं उपत्यकाका नदीहरू वर्षेनी डुबानको मुख्य कारक बन्दै आएका छन् । नदीछेउको अव्यवस्थित शहरीकरण, बस्तीको विस्तार र बोटल नेकजस्तो देखिने चोभार गल्छीलाई दोष दिँदै सरकारले डुबान समस्या समाधानको नाममा गलत दिशा समातेको विज्ञ र अभियन्ताहरूको भनाइ छ ।

डुबानको कारण : हराउँदै गएका जल प्रवाहहरू

बागमती नदीको बहाव क्षेत्र–'जल प्रवाह'–निरन्तर घट्दै गएको छ । अधिकार सम्पन्न बागमती सभ्यता एकीकृत विकास समितिका अनुसार उपत्यकामा नदी छेउछाउमा संरचना र सडक बनाइँदा नदीले आफ्नो बग्ने बाटो गुमाएको छ । निर्देशक उद्धव नेपाल भन्छन्, "डुबानको मुख्य कारण नदी नभई बस्तीले खोला मिचेको हो, खोला त आफ्नो बाटोमै बगिरहेको थियो।" उनका अनुसार सरकारले खोलाको स्वामित्वमा रहेका जमिन खाली गराउनैपर्छ ।

भूगोलविद् शिव बास्कोटाले अव्यवस्थित सहरीकरणले पानीको प्रवाहलाई बिगारेको बताउँछन् । पहिले वर्षाको पानी जमिनले सोस्ने गर्थ्यो तर अहिले जमिन नै छैन, खेत छैन, जमेको पानी खोलामा सिधा पुग्छ र खोलाको वहाव क्षमता घटाउँछ ।

तोकिएनअनुसारको जल प्रवाह प्राप्त हुन नसकेको

२०६९ सालमा सरकारले बागमती र सहायक नदीहरूमा तोकिएको जल प्रवाह अझै कार्यान्वयनमा आउन सकेको छैन । समितिको पछिल्लो अध्ययन (२०८० साल) अनुसार उपत्यकाको विभिन्न खण्डमा २० मिटरदेखि ११९ मिटर चौडाइ आवश्यक देखिएको छ । विशेषतः विष्णुमती दोभानदेखि कटुवाल दहसम्मको खण्डमा पहिलेको ८० मिटरको साटो अहिले ११९ मिटर जल प्रवाह आवश्यक देखिएको छ । तर हालसम्म बागमतीले त्यसको आधा चौडाइसमेत पाएको छैन ।

सरकारको ध्यान चोभार गल्छीमा

सरकारले उपत्यकाको पानी निकास एक मात्र मार्ग चोभार गल्छीलाई "बोटल नेक" भन्दै डुबानको मुख्य कारक मानेर खोल्ने तयारी थालेको छ । १४ जेठमा विपद् जोखिम न्यूनीकरण

बाँकी पेज ७ मा

# काँक्रेबारीको वन अतिक्रमण मुद्दा अदालतमा, राजनीतिक दल र प्रशासन कडाइका पक्षमा



भक्तपुर । भक्तपुरको काँक्रेबारीस्थित सामुदायिक वन क्षेत्र अतिक्रमण गरेको आरोपमा डिभिजन वन कार्यालयले जिल्ला अदालतमा मुद्दा दायर गरेको छ। अतिक्रमणविरुद्ध कडाइका लागि प्रमुख जिल्ला अधिकारी (सिडिओ) भरतमणि पाण्डेको अध्यक्षतामा जिल्ला प्रशासन कार्यालयको कक्षमा राजनीतिक दलहरूको सहभागितामा विशेष बैठक बसेको हो।

बैठकमा नेपाल मजदुर किसान पार्टीका नेता सूर्यभक्त त्वातीले नगरकोट र बागेश्वरीको भङ्गेरी डाँडामा रहेको मझुवा वन मासेर बनाइएको रग्बी मैदान पुनः वन क्षेत्र घोषणा गरी वृक्षरोपण गर्नुपर्ने धारणा राखे। साथै, मध्यपुर

बाँकी पेज ७ मा



# कांग्रेस–एमालेको सात बुँदे सहमति सत्ता साझेदारीमा सीमित

काठमाडौं । संविधान संशोधनलाई प्रमुख एजेन्डा बनाउँदै एक वर्षअघि गठबन्धनमा आएका नेपाली कांग्रेस र नेकपा एमालेबीचको सात बुँदे सहमति सत्ता साझेदारीको यात्राभन्दा बाहिर जान सकेको छैन। असार १७ गते राति एमाले अध्यक्ष केपी शर्मा ओली र कांग्रेस सभापति शेरबहादुर देउवाबीच भएको सहमतिमा संविधान संशोधनलाई प्राथमिकतामा राखिए पनि त्यसबारे अहिलेसम्म कुनै ठोस पहल भएको छैन।

सहमतिको दोस्रो बुँदामा उल्लेख गरिएको छः "संविधान अभ्यासमा देखिएका सबल-दुर्बल पक्षको समीक्षा गरी राजनीतिक स्थायित्वका लागि आवश्यक संशोधन र तदनुकूल कानुन निर्माणलाई प्राथमिकता दिने।" तर, एक वर्ष बितिसक्दा पनि न संविधान संशोधन प्रक्रियाको सुरुवात भएको छ, न त यो विषयमा सत्ता गठबन्धनबीच गम्भीर संवाद नै देखिएको छ।

दुईतिहाइ बहुमतको अभाव, संशोधनमा अवरोध

सत्तारूढ गठबन्धनले संविधान संशोधनलाई व्यवहारमा उतार्न नसक्नुको प्रमुख कारण दुईतिहाइ बहुमतको अभाव मानिएको छ। एमालेका प्रमुख सचेतक महेश बर्तौलाका अनुसार, आवश्यक समर्थन नभएकाले संसदमा संशोधन प्रस्ताव अघि बढाउँदा पारित हुने सम्भावना न्यून देखिन्छ। साथै, बहस अनियन्त्रित ढंगमा जान

बाँकी पेज ७ मा

# ३२३ वर्षको इतिहास बोकेको भक्तपुरको ङ्यातापोल मन्दिर



भक्तपुर । तःमारीस्थित ऐतिहासिक ङ्यातपोल मन्दिरको गजूर स्थापना गरी मन्दिर निर्माण सम्पन्न भएको ३२३ वर्ष पूरा भएको छ। वि.सं. १७५९ साल असार शुक्ल प्रतिपदाका दिन मन्दिरको गजूर राखेर कोट्याहुती यज्ञ गरिएको थियो।

यस मन्दिर निर्माण सम्पन्न भएको २२ महिना पश्चात् भक्तपुरका एक व्यक्ति 'दुखी भारो'ले रामायणको नेवारी अनुवाद गरेका थिए। अनुवादग्रन्थको एक अंशमा उनले मन्दिर निर्माणका लागि आवश्यक जमिनको कारण आफ्नै पुर्ख्यौली थलो 'ननिछेँ' छाड्नुपरेको र त्यसपछि 'भुलाछेँ'मा सर्नुपरेको उल्लेख गरेका छन्।

बाँकी पेज ७ मा

# स्थानीय तहमा जथाभावी बजेट खर्च, दीर्घकालीन योजना उपेक्षित

काठमाडौं । देशभरका अधिकांश स्थानीय तहमा दीर्घकालीन योजना निर्माणलाई प्राथमिकता नदिइने र जथाभावी ढंगले बजेट खर्च गर्ने प्रवृत्ति बढ्दै गएको देखिएको छ। यस्ता अभ्यासले स्थानीय तहमा बेथिति र वित्तीय अनुशासनहीनता मौलाउँदै गएको महालेखा परीक्षकको ६१ औं वार्षिक प्रतिवेदनले स्पष्ट पारेको छ।

स्थानीय सरकार सञ्चालन ऐन, २०७४ अनुसार गाउँपालिका र नगरपालिकाले आफ्नो क्षेत्रको विकासका लागि आवधिक योजना बनाउनुपर्ने कानुनी प्रावधान भए पनि अधिकांश स्थानीय तहले यस्तो योजना बनाएका छैनन्। जसले बनाएका छन्, ती पनि वार्षिक




बजेट बनाउँदा दीर्घकालीन लक्ष्यभन्दा पनि सालबसाली तथा तात्कालिक विषयलाई मात्र समावेश गर्छन्।

'योजना तर्जुमा केवल कर्मकाण्ड'

महालेखा परीक्षक तोयम रायाका अनुसार स्थानीय तहमा योजना तर्जुमा प्रक्रिया ऐन, नीति र मापदण्डविपरीत गरिएको छ। जनप्रतिनिधि र प्रमुख प्रशासकीय अधिकृतबीचको मिलेमतोले वार्षिक बजेट र योजना बनाउने कार्य केवल एक परम्परा र औपचारिकतामा सीमित भएको छ।

रायाले भने, "हामीले वर्षेनि प्रतिवेदनमार्फत यी समस्याहरू औंल्याउँदै आएका छौं, तर स्थानीय तहका जनप्रतिनिधि र प्रशासनिक संयन्त्रले गम्भीरतापूर्वक लिएको देखिन्न।"

बाँकी पेज ७ मा

# एसईई नतिजा सार्वजनिक : गणितमा सबैभन्दा धेरै अनुत्तीर्ण

काठमाडौं । विद्यालय शिक्षाको महत्वपूर्ण आधार मानिने माध्यमिक शिक्षा परीक्षा (एसईई) को परीक्षाफल शुक्रबार साँझ सार्वजनिक गरिएको छ। राष्ट्रिय परीक्षा बोर्डका अनुसार यो वर्ष परीक्षामा सहभागी भएका कुल ५ लाख १४ हजार ७१ जना विद्यार्थीमध्ये झन्डै ६१.८१ प्रतिशतले मात्र कक्षा ११ अध्ययन गर्न सक्ने 'ग्रेड' प्राप्त गरेका छन्।

गत वर्ष मात्र ४८ प्रतिशत विद्यार्थीले कक्षा ११ पढ्ने योग्यता प्राप्त गरेका थिए भने बाँकी ५२ प्रतिशत 'नन-ग्रेडेड' भएका थिए। यस वर्ष त्यो अनुपात घटेर ३८ प्रतिशत पुगेको छ। प्रधानमन्त्री केपी शर्मा ओलीले पूर्वाञ्चल विश्वविद्यालयको दीक्षान्त समारोहमा यसपटक ६० देखि ६५ प्रतिशतबीच विद्यार्थी उत्तीर्ण हुने अपेक्षा गरिएको बताएका थिए।

**ग्रेड वितरण**

बोर्डका अनुसार उत्तीर्ण विद्यार्थीहरूमध्ये–

जीपीए ३.६ देखि ४.० पाउने: ४८,१७७ जना

जीपीए ३.२ देखि ३.६: ८१,३८५ जना

जीपीए २.८ देखि ३.२: ७९,१२४ जना

जीपीए २.४ देखि २.८: ४८,४७९ जना

जीपीए २.० देखि २.४: ४,१२६ जना

जीपीए १.६ देखि २.०: ८ जना

प्रदेशगत परिणाम

उत्तीर्ण विद्यार्थीहरूको संख्या प्रदेश अनुसार यस्तो छ:

कोशी: ४७,८३५

मधेश: ५९,७४९

बागमती: १,१९,५१७

गण्डकी: ४७,८४९

लुम्बिनी: ५७,६८७

कर्णाली: ४६,४५५

सुदूरपश्चिम: ५९,८०४

**विषयगत कमजोरी: गणितमै बढी फेल**

परीक्षा नियन्त्रण कार्यालयका अनुसार विषयगत रूपमा सबैभन्दा धेरै विद्यार्थी गणितमा 'नन-ग्रेडेड' भएका छन्। कुल १,२८,२१५ जना विद्यार्थी गणितमा अनुत्तीर्ण भएका छन्। त्यसपछि अङ्ग्रेजीमा ८०,६७२, विज्ञान र प्रविधिमा ७९,२७१, नेपालीमा ५४,७३५ र सामाजिक शिक्षामा ५३,१८६ विद्यार्थी अनुत्तीर्ण भएका छन्। अर्थशास्त्रमा ४२,१५० र अतिरिक्त गणितमा १८,२२२ जनाले न्यूनतम ग्रेड ल्याउन सकेनन्।

परीक्षा बोर्डका अध्यक्ष महाश्रम शर्माका अनुसार, "यसपालि पनि गणितमा विद्यार्थीहरू कमजोर भएको देखिन्छ।"

**उत्तीर्ण हुने न्यूनतम अङ्क**

एसईईमा सफल हुन विद्यार्थीले सैद्धान्तिक परीक्षा (७५ पूर्णाङ्क) मा कम्तीमा ३५ प्रतिशत (२७ अङ्क) र प्रयोगात्मक वा आन्तरिक मूल्याङ्कन (२५ पूर्णाङ्क) मा ४० प्रतिशत (१० अङ्क) प्राप्त गर्नुपर्नेछ।

२०७८ सालदेखि लागू गरिएको 'लेटर ग्रेडिङ' प्रणालीअनुसार न्यूनतम योग्यता नपुगेका विद्यार्थीले प्रमाणपत्र प्राप्त गर्दैनन्। गत वर्ष ९० हजार विद्यार्थी अनुत्तीर्ण भएका थिए, जसमा करिब ७५ हजारले यस वर्ष पुनः परीक्षा दिएका थिए।

**विशेष सहभागी र तथ्याङ्क**

यस वर्ष बाल सुधारगृह तथा कारागारबाट ४८ जना, लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक समुदायबाट ३० जना, मनाङबाट ४६ जना र काठमाडौँबाट सबैभन्दा धेरै करिब ३९ हजार विद्यार्थी एसईईमा सहभागी भए।

**आन्दोलनबीच पनि समयमै नतिजा**

चैतमा सम्पन्न एसईई परीक्षा गत वर्षभन्दा ५० हजार बढी विद्यार्थीले दिएका थिए। शिक्षक आन्दोलनकै बीच बोर्डले उत्तर पुस्तिका मूल्याङ्कन ५० भन्दा बढी स्थानमा सम्पन्न गर्दै नतिजा सार्वजनिक गरेको हो। आन्दोलनका कारण एक साता ढिलाइ भएको परीक्षा नियन्त्रण कार्यालयले जनाएको छ।

**पूरक परीक्षा: साउन २९ देखि**

बोर्डले दुई विषयसम्म 'नन-ग्रेडेड' भएका विद्यार्थीका लागि साउन २९ गतेदेखि ग्रेडवृद्धि परीक्षा सुरु हुने जनाएको छ। अध्यक्ष शर्माका अनुसार यस वर्ष सबै विषयका लागि पूरक परीक्षा दिन पाउने व्यवस्था गरिएको छ।

# सबैले सम्मान र अनुकरण गरोस् भन्ने खालको जीवन होस् : अध्यक्ष प्रचण्ड



भक्तपुर । पूर्वप्रधानमन्त्री तथा नेकपा (माओवादी केन्द्र)का अध्यक्ष पुष्पकमल दाहाल 'प्रचण्ड'ले समाजवादी जीवनशैलीतर्फ उन्मुख हुनुको विकल्प नभएको बताएका छन्। शनिबार मध्यपुर थिमिमा आयोजित पार्टीका केन्द्रीय सल्लाहकार कृष्णलाल गोजा श्रेष्ठको श्रद्धाञ्जली सभालाई सम्बोधन गर्दै उनले जीवनलाई अरुका लागि प्रेरणादायी बनाउनेतर्फ लाग्नुपर्नेमा जोड दिए।

"मृत्यु हाम्रो हातमा छैन, तर जीवन कसरी बाँच्ने हाम्रै हातमा छ," भन्दै अध्यक्ष प्रचण्डले जीवनलाई यस्तो बनाउनु पर्ने धारणा व्यक्त गरे, "सबैले सम्मान र अनुकरण गरोस् भन्ने खालको जीवन होस्।"

कम्युनिष्ट विचार बोकेका व्यक्तिको व्यवहार सरल, सामाजिक, श्रम र उत्पादनमा केन्द्रित तथा पारदर्शी हुनुपर्ने उनको भनाइ थियो। "अब समाजवादी जीवनशैलीतर्फ नगई हुँदैन," अध्यक्ष प्रचण्डले स्पष्ट पारे।

व्यक्तिगत स्वार्थभन्दा माथि उठेर सामूहिक हित, समानता, न्याय र समान अवसरलाई प्राथमिकता दिने मानिसहरू समाजमा मृत्युपछि पनि जीवित रहने उनको भनाइ थियो। पार्टीमा रुपान्तरण अभियान जारी रहेको र जनतामा आशा जगाउने अघिल्लो सरकार आफू नेतृत्वमा रहेको पनि उनले स्मरण गरे।

"हाम्रो व्यवहारमै समाजवादी क्रान्तिको भविष्य निर्भर छ," उनले बताए। साथै, उनले मध्यपुरका नेता कृष्णलाल गोजा श्रेष्ठको जीवनलाई अनुकरणीय उदाहरणका रूपमा प्रस्तुत गरे।

"कमरेड कृष्णलालले मध्यपुरलाई मात्र होइन, सम्पूर्ण देशका कार्यकर्ताका लागि नेतृत्वप्रतिको विश्वास र सक्रियताको उदाहरण प्रस्तुत गर्नुभएको छ," अध्यक्ष प्रचण्डले भने।

उनले नेवाः समुदायजस्तै विकसित सभ्यता भएका समुदायहरू समाजवादको पाठशालाजस्तै भएको उल्लेख गर्दै विविध पक्षबाट सिकेर समाजवादको नेपाली मोडल बनाउन आफू लागिपरेको जानकारी गराए।

श्रद्धाञ्जली सभामा माओवादी केन्द्रका उपाध्यक्ष अग्नि सापकोटा, स्थायी समिति सदस्य लीलामणि पोखरेल, पूर्वमन्त्री शशी श्रेष्ठ, प्रतिनिधिसभा सदस्य गङ्गा कार्की, केन्द्रीय सदस्यहरू दिलिप प्रजापति भिस्म, प्रह्लाद बुढाथोकी, गोविन्द आचार्य, डिपी ढकाल, प्रतिमा श्रेष्ठ, रामप्रसाद सापकोटा दीपशिखा, उमा कपाली लगायतको उपस्थिति रहेको थियो।

कार्यक्रम माओवादी केन्द्र मध्यपुर थिमि नगर समितिका अध्यक्ष विजयकृष्ण श्रेष्ठको अध्यक्षतामा सम्पन्न भएको थियो। पार्टीका नेताकार्यकर्ता, कृष्णलाल गोजाका पारिवारिक सदस्य तथा स्थानीयहरूको उपस्थिति रहेको जिल्ला संयोजक सुनिल गोठे बासुले जानकारी

# संस्कृति र संस्कारको जगेर्ना भएमा मात्र समुदायको अस्तित्व सम्भव : सांसद कायस्थ




धरान, – कोशी प्रदेशकी सांसद यशोदा कायस्थले नेपाल जस्तो बहुजातीय, बहुसांस्कृतिक र बहुधार्मिक देशमा समुदायको अस्तित्व जोगाउन सबैले आ-आफ्नो संस्कृति र संस्कारको संरक्षण तथा प्रवर्द्धनमा सक्रिय रहनुपर्ने आवश्यकता औंल्याएकी छन्। धरानमा लोपोन्मुख नेवार परम्परागत धाँ बाजाको पुनर्जागरणका लागि सञ्चालित २१ दिने तालिमको समापन समारोहलाई सम्बोधन गर्दै सांसद कायस्थले भनिन्, "जातीय संस्कृति र संस्कार जगेर्ना भएमा मात्र समुदायको पहिचान र अस्तित्व रहन्छ।"

समारोहमा उनले समुदाय-समुदायबीचको सांस्कृतिक विविधता र आत्मपहिचानलाई जोगाएर सहअस्तित्वमा बस्न सकिने उल्लेख गरिन्। धाँ बाजाको संरक्षण र नयाँ पुस्तामा यसको हस्तान्तरण गर्ने उद्देश्यसहित नेवा पासा खलः धरानले सञ्चालन गरेको तालिमको समापन कार्यक्रम धरानको सिद्धि नेवा परिषद्को परिसरमा सम्पन्न भयो।

तालिममा धरानका ६० जना बालबालिकाले भाग लिएका थिए। उनीहरूलाई काठमाडौँबाट आएका प्रशिक्षक निकित डंगोलले प्रशिक्षण दिएका थिए।

समापन समारोहमा धरान-३ का वडाध्यक्ष विद्या शाक्यले वडाको तर्फबाट संस्कृति र संस्कारको संरक्षण तथा प्रवर्द्धनमा निरन्तर लागिरहने प्रतिबद्धता व्यक्त गरे। त्यसैगरी, नेवा देय दबूँका केन्द्रीय उपाध्यक्ष अनिल श्रेष्ठले पासा खलःले यस्तो महत्वपूर्ण तालिम सञ्चालन गरेर नेवार समुदायबीच एक उदाहरणीय कार्य गरेको बताए। उनका अनुसार काठमाडौं उपत्यकापछि धरान नेवार संस्कृतिको उत्थानमा अग्रस्थानमा छ।

परम्परागत धाँ बाजा सात प्रकारका तालहरूमा बजाइन्छ– ४ मात्रामा चोप ताल, ७ मात्रामा प्रताप र जति ताल, ८ मात्रामा तालमा, १४ मात्रामा ग्रह ताल, १० मात्रामा अस्त्र ताल, र ६ मात्रामा पलेमा ताल। यी सबै तालहरू एकै साथ बजाइने 'ग्वाला' शैली धाँ बाजाको विशेषता हो। ग्वालामा भगवान् ग्वाला, नित्यनाथ ग्वाला, श्रीकृष्ण ग्वाराजजस्ता देवतासँग सम्बन्धित स्तुति समावेश हुन्छन्।

तालिमका संयोजक तथा पासा खलःका महासचिव अमृत श्रेष्ठले नयाँ पुस्तालाई संस्कृति, संस्कार र परम्परा सिकाउने उद्देश्यले तालिम सञ्चालन गरिएको जानकारी दिए। कार्यक्रमको सभापतित्व आयुष शाक्यले गरेका थिए।

# विनायकमा दन्त शिविर सम्पन्न



भक्तपुर । विद्यार्थीको स्वास्थ्यप्रति चासो दिँदै समय-समयमा स्वास्थ्य शिविर सञ्चालन गर्दै आएको विनायक शिक्षा निकेतनले असार १७ गते विद्यालय परिसरमा एक दिवसीय दन्त स्वास्थ्य शिविर आयोजना गरेको छ ।

उक्त शिविर काठमाडौँ मेडिकल कलेजको प्राविधिक सहयोगमा तथा रोटरी क्लब अफ मध्यपुर र चिमालय नेपालको संयुक्त संयोजनमा सम्पन्न भएको हो । शिविरमा विद्यालयको पूर्वप्राथमिक तहका २०० भन्दा बढी विद्यार्थीहरूको दाँत परीक्षण गरिएको थियो ।

बिहान ११ बजेदेखि दिउँसो ३ बजेसम्म सञ्चालन भएको शिविरमा काठमाडौँ मेडिकल कलेजका विशेषज्ञ चिकित्सक र सहायकहरूको टोलीले दाँतसम्बन्धी समस्या भएका विद्यार्थीलाई परीक्षण र परामर्श दिएका थिए । अभिभावकहरूको उल्लेख्य सहभागितामा सम्पन्न कार्यक्रममा विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले विनायक शिक्षा निकेतनले स्थापना कालदेखि नै विद्यार्थीहरूको समग्र विकासमा विशेष ध्यान दिँदै आएको जानकारी दिए ।

उनले स्वस्थ शरीर भएका विद्यार्थीहरू शारीरिक, मानसिक र बौद्धिक रूपले सक्षम हुन्छन् भन्ने मान्यताका साथ विद्यालयले स्वास्थ्यसम्बन्धी क्रियाकलापमा निरन्तरता दिएको बताए ।

# राधेराधेमा फिस टनेल एक्स्पो २०८२ जारी, बालबालिका लक्षित आकर्षक कार्यक्रम



भक्तपुर । भक्तपुरको मध्यपुरथिमिको-राधेराधेमा 'फिस टनेल एक्स्पो २०८२' जारी छ। औद्योगिक शान्ति नेपाल संस्थाद्वारा जिल्लामा पहिलोपटक आयोजना गरिएको यस मेला सांसद दुर्लभ थापाले उद्घाटन गरेका हुन्।

साउन १० गतेसम्म सञ्चालनमा हुने एक्स्पोको मुख्य आकर्षण 'फिस टनेल' र 'सुनामी राइड' हुन्। आयोजक अध्यक्ष सन्दीप महतका अनुसार नेपालमै हालसम्मकै सबैभन्दा ठूलो टनेल जस्तै संरचनामा पारदर्शी पर्खालभित्र पौडिरहेका समुद्री माछा नजिकैबाट अवलोकन गर्न सकिने व्यवस्था गरिएको छ। विशेष प्रकाश र ध्वनि प्रविधिबाट समुद्रको वातावरण सिर्जना गरिएको यो टनेलमा आगन्तुकले जीवित जलजीवसँगै फोटो, भिडियो र टिकटक निर्माण गर्न सक्नेछन्।

भारतबाट ल्याइएका दुर्लभ १६० प्रजातिका रंगीन समुद्री माछाहरू टनेलमा प्रदर्शनमा छन्। विद्यार्थी, बालबालिका र जलजीवप्रेमीहरूका लागि यो अनुभव ज्ञानवर्धक र मनोरञ्जनात्मक दुवै हुनेछ।

'सुनामी राइड' एक्स्पोको अर्को विशेषता हो, जसले समुद्री लहर जस्तै हल्लिने अनुभव दिन्छ। बालबालिकादेखि युवावर्ग लक्षित विभिन्न खेलजस्तै पिङ, रोटेपिङ, ड्रागन राइड, जम्पिङ, कोलम्बस आदि पनि राखिएको छ। नेवारी खाजा, सम्बे, बजीलगायतका परिकारहरू, गेम जोन तथा फोटो स्पटसमेत समावेश गरिएको एक्स्पो बिहान १० बजेदेखि साँझ ८ बजेसम्म खुला रहनेछ।

स्थानीय पर्यटन प्रवर्द्धन, पारिवारिक रमाइलो र बालबालिकालाई जलजीवसम्बन्धी जानकारी दिन लक्षित गरिएको यो मेला साउन १० गतेसम्म चल्नेछ। साथै, एक्स्पो अवधिभर विद्यालयबाट सामूहिक रूपमा मेला अवलोकन गर्न आउने विद्यार्थी समूहका लागि विशेष छुटको व्यवस्था गरिएको आयोजकले जनाएको छ।

# शंखधर साकोसद्वारा आँखा शिविर सम्पन्न

भक्तपुर । मध्यपुर थिमी-४ मा सञ्चालित शंखधर बचत तथा ऋण सहकारी संस्था लि.ले सामाजिक उत्तरदायित्व अन्तर्गत शनिबार एक बृहत आँखा शिविर सम्पन्न गरेको छ। संस्था अन्तर्गतको सामाजिक उप-समितिको आयोजनामा भएको शिविर सिटी आई केयर सेन्टरको प्राविधिक सहयोगमा सम्पन्न भएको हो।

आदर्श मा.वि. लायकुमा आयोजित शिविरमा आँखा परीक्षण गराउन आएका ३५५ जनालाई निःशुल्क चस्मा र औषधि वितरण गरिएको थियो। तीमध्ये २० जनामा मोतिविन्दुको लक्षण देखिएको डाक्टरहरूले जानकारी दिएका छन्। गत वर्ष आयोजित शिविरमा ३६४ जना लाभान्वित भएका थिए।

# विद्यादेवी भण्डारीको सक्रिय राजनीतिमा पुनरागमनको घोषणा



काठमाडौं । पूर्वराष्ट्रपति तथा नेकपा (एमाले) की पूर्वउपाध्यक्ष विद्यादेवी भण्डारीले पुनः सक्रिय राजनीतिमा फर्किने औपचारिक घोषणा गरेकी छन्।

शनिबार काठमाडौंस्थित राष्ट्रिय सभागृहमा मदन भण्डारी फाउण्डेशनले आयोजना गरेको 'जबजका तीन दशक' विषयक विचार गोष्ठी तथा राष्ट्रिय पुरस्कार हस्तान्तरण समारोहमा सम्बोधन गर्दै उनले पार्टीको सदस्यता नवीकरण गरी एमालेमा फर्किएको जानकारी दिइन्।

"फरक ढङ्गको राजनीतिक जिम्मेवारीबाट मुक्त भएपछि नेकपा (एमाले)मै रहेर पार्टीको राजनीतिक यात्रालाई निरन्तरता दिने पवित्र उद्देश्यका साथ मैले पार्टी सदस्यता नवीकरण गरेको छु," उनले भनिन्, "अब म नेकपा (एमाले) परिवारको एक सदस्यको रूपमा पुनः जोडिएको छु र यसमा म गर्व गर्दछु।"

पूर्वराष्ट्रपति भण्डारीले पार्टी र जनताको हित नै आफ्नो मुख्य उद्देश्य रहेको स्पष्ट पार्दै व्यक्तिगत महत्वाकांक्षा नभएको बताइन्। उनले भनिन्, "देश र जनताको हित नै मेरो ध्येय र लक्ष्य हो। म राजनीतिमा कुनै पदका लागि होइन, योगदानका लागि सक्रिय हुनेछु।"

भण्डारीले पति तथा जननेता मदन भण्डारीको योगदान स्मरण गर्दै 'जनताको बहुदलीय जनवाद' (जबज) लाई अझ प्रभावकारी ढङ्गमा कार्यान्वयन गर्न आवश्यक रहेको बताइन्। जबजलाई नेपाली समाजको यथार्थ र परिवर्तनशील आवश्यकताका आधारमा मौलिक वैचारिक सिद्धान्तको रूपमा स्थापित गर्दै उनले सामाजिक-आर्थिक रूपान्तरणका लागि यसको भूमिका अझै महत्वपूर्ण रहेको औंल्याइन्।

कार्यक्रममा बोल्दै उनले मदन भण्डारीको निधनपछि सुरु भएको फाउण्डेशनको यात्रा जननेताको सपना साकार पार्ने अभियानको रूपमा निरन्तर अघि बढिरहेको बताइन्। उनले फाउण्डेशनलाई "सामाजिक-आर्थिक समृद्धिको अभियान" का रूपमा परिभाषित गर्दै त्यसलाई अझ प्रभावकारी बनाउन सबैको सहकार्य आवश्यक रहेको उल्लेख गरिन्।

पूर्वराष्ट्रपतिले आफ्नो विद्यार्थी जीवनदेखि नै अनेरास्ववियू र कम्युनिष्ट आन्दोलनमा सक्रिय सहभागिता रहेको स्मरण गराउँदै तत्कालीन नेकपा (माले) को कार्यकर्ताबाट सुरु भएको राजनीतिक यात्रा राष्ट्रपतिसम्म पुगेको बताइन्। राष्ट्रपतिको कार्यकालमा उनले राष्ट्र र जनताको स्वाभिमानमा आँच नआउने गरी सेवा गरेको दाबी समेत गरिन्।

उनले पूर्वप्रधानमन्त्री तथा पार्टी अध्यक्ष केपी शर्मा ओलीको नेतृत्वमा अगाडि बढिरहेको 'समृद्ध नेपाल, सुखी नेपाली' अभियानलाई समर्थन जनाउँदै पार्टीप्रति विश्वास व्यक्त गरिन्।

विद्यादेवी भण्डारीको सक्रिय राजनीतिमा पुनरागमनसँगै नेकपा (एमाले) भित्र नयाँ उत्साह थपिएको आकलन गरिँदैछ। जननेता मदन भण्डारीको सिद्धान्तप्रति प्रतिबद्धता दोहोर्‍याउँदै उनले सामाजिक न्याय, समानता र समृद्ध राष्ट्र निर्माणमा आफू समर्पित रहने प्रतिवद्धता व्यक्त गरिन्।

भण्डारीको यो घोषणालाई राजनीतिक वृत्तमा नेकपा (एमाले) भित्रको सशक्त पुनर्संयोजन र भावी रणनीतिमा प्रभाव पार्ने संकेतका रूपमा हेरिएको छ।

# प्रहरी जागिर छाडेर आमा बनेकी संगिनीद्वारा निजी जासूसी कम्पनी सञ्चालन



आजभोलि एउटा शब्द चर्चामा छ– फ्रेन्डशिप गोल्स । जब साथीहरू मिलेर केही विशेष काम गर्छन्, त्यस्तो सम्बन्धलाई यसै शब्दले चिनाउँछ। बेलायतकी दुई महिला अहिले यसैको उदाहरण बनेका छन्। एकैसाथ प्रहरी सेवामा कार्यरत रहेकी उनीहरूले बच्चाहरूका कारण जागिर छाड्नुपर्‍यो। तर अब उनीहरू मिलेर जासूसी कम्पनी सञ्चालन गरिरहेका छन् र जटिल मुद्दा सुल्झाउँदै चर्चामा छन्।

बेलायतको एसेक्समा बसोबास गर्ने ५६ वर्षीया स्याम हचिन्सन र ४० वर्षीया एम्मा कोल्स, कुनै चलचित्रकी जासूसभन्दा कम छैनन्। उनीहरू पूर्व प्रहरी अधिकारी हुन्। अब भने उनीहरूले संयुक्त रूपमा निजी जासूसी संस्था 'वेरिटी हेन्टन' सञ्चालन गर्दै आइरहेका छन्, जुन सन् २०२० को अप्रिलमा स्थापना गरिएको थियो। बच्चाहरूको हेरचाह र विद्यालयका दायित्वसँगै उनीहरू धोखेबाजको पर्दाफास, स्टाकिङ मुद्दा, र अनलाइन ठगी (जस्तै ' क्याटफिसिङ') जस्ता विषयहरूमा अनुसन्धान गर्छन्।

उनीहरूको सबैभन्दा ठूलो बल भनेकै उनीहरूको 'सामान्य' देखिने क्षमता हो। स्याम भन्छिन्, "हामी कुनै रेल स्टेशनमा कसैको निगरानी गरिरहेका हौं भने पनि कोही शंका गर्दैन। यदि कुनै पुरुष दुई घण्टा उभिएको देखियो भने अचम्म मानिन्छ, तर हामीमाथि त्यसो हुँदैन।"

कसरी सुरु भयो यो यात्रा?

स्याम र एम्माको भेट एसेक्स प्रहरीको भ्रष्टाचार नियन्त्रण इकाइमा भएको थियो। बच्चा भएपछि दुवैले प्रहरी जागिर छाडे। केही समयपछि उनीहरूको भेट टेस्को स्टोरमा नियमित हुन थाल्यो र त्यही बेला उनीहरूले केही नयाँ सुरू गर्ने निर्णय गरे– जसबाट 'वेरिटी हेन्टन' जन्मियो। यी 'जासूस आमा'हरू बिहान बच्चाहरूलाई विद्यालय छोड्छन् र रातको समयमा गोप्य अपरेशनको योजना बनाउँछन्। नङ बनाउने सैलुनदेखि जिमसम्म, उनीहरू मोबाइल र ल्यापटपमार्फत केसको निगरानी गरिरहन्छन्। एम्मा भन्छिन्, "हिजो मात्र म नङ बनाउँदै गर्दा केस हाँकिरहेकी थिएँ!"

उनीहरूको बालबच्चालाई थाहा छ कि आमाहरू जासूस हुन्, तर विद्यालयका साथीहरू विश्वास गर्दैनन्। बरु उल्टै, "झुटो नबोल है" भनेर चेतावनी दिन्छन्।

को-को हुन् त यिनीहरूका ग्राहक?

उनको ग्राहक दायर ासमेत निकै फराकिलो छ। सामान्यतः प्रेमी-प्रेमिकामाथि शंका गर्नेहरूदेखि लिएर विदेशी राजकुमार र सेलिब्रिटीहरू समेत छन्। केही समयअघि एक चर्चित सेलिब्रिटीले लण्डन भ्रमणका क्रममा आफूमाथि नजर राख्ने स्टाकरबाट बच्न यी जासूसहरूलाई भाडामा लिएका थिए।

सबैभन्दा चकित पार्ने केस भने 'क्याटफिसिङ' को हुन्छ– जहाँ ठगहरूले सेलिब्रिटीको नाममा मानिसहरूलाई ठग्छन्। एक महिलालाई लाग्यो कि उनी गायक मार्टी पेलोसँग सम्बन्धमा छिन्, र उनले ६९,००० पाउन्ड बिटक्वाइनमार्फत पठाइन्। तर जब साँचो खुलेको थियो, उनी गहिरो आघातमा परेकी थिइन्।

धोका दिने प्रेमी समात्नु उनीहरूलाई सबैभन्दा रोचक लाग्छ। कहिलेकाहीं उनीहरूले सम्बन्ध विश्वसनीय प्रमाणित गरिदिन्छन् भने कहिलेकाहीं तितो यथार्थ देखाउँछन्– जसले ग्राहकलाई राहत दिलाउँछ।

उनीहरूले केसको जटिलताअनुसार ५०० पाउन्डदेखि १०,००० पाउन्डसम्म शुल्क लिन्छन्। अहिले उनीहरूसँग १०० जना अपरेटिभहरूको टिम छ। स्याम र एम्मा अब धेरैजसो केस योजना र ग्राहकसँगको प्रत्यक्ष सम्वादमै केन्द्रित हुन्छन्। उनीहरू निकट भविष्यमा न्युयोर्कसम्म सेवा विस्तार गर्ने तयारीमा छन् र एक टेलिभिजन शोमा समेत काम सुरु गरिसकेका छन्।

# थाइल्यान्डकी प्रधानमन्त्री सिनावात्रा निलम्बनमा



बैंकक । थाइल्यान्डकी प्रधानमन्त्री पेटोङटार्न सिनावात्रालाई देशको संवैधानिक अदालतले मंगलबार निलम्बन गरेको छ। कम्बोडियासँगको कूटनीतिक विवादमा उनको आचरणप्रति प्रश्न उठ्दै गएपछि अदालतले छानबिन सुरु गर्दै उनलाई कार्यभारबाट निलम्बन गर्ने निर्णय गरेको हो।

३८ वर्षीया सिनावात्राले एक वर्षअघि मात्र पद सम्हालेकी थिइन्। तर मे महिनामा थाइल्यान्ड-कम्बोडिया सीमा क्षेत्रमा भएको झडपका क्रममा देखिएको उनकी भूमिका विवादमा परेको छ। उक्त झडपमा एक कम्बोडियाली सैनिकको मृत्यु भएको थियो।

विवादको मूलमा गएको अडियो रेकर्डिङमा सिनावात्राले कम्बोडियाका पूर्व प्रधानमन्त्री हुन सेनलाई 'काका'को सम्बोधन गर्दै फोन गरेको र एक थाई सैन्य कमान्डरलाई 'प्रतिद्वन्द्वी' भनेको देखिन्छ। यो कुराले थाई राजनीतिक वृत्तमा तीव्र प्रतिक्रिया निम्त्याएको छ। रूढीवादी सांसदहरूले प्रधानमन्त्रीले विदेश नीतिमा थाइल्यान्डको सैन्य प्रतिष्ठानलाई कमजोर बनाएको आरोप लगाएका छन्।

संवैधानिक अदालतले ७-२ को मतले उनलाई तत्काल प्रभावले पदबाट निलम्बन गर्ने आदेश दिएको छ। अदालतले आफ्नो अन्तिम निर्णय नआएसम्म उनी कार्यभारमा फर्कन नपाउने स्पष्ट पारेको छ।

राजनीतिक द्वन्द्वको पृष्ठभूमि

थाइल्यान्डको राजनीति लामो समयदेखि सैन्य, शाही र रूढीवादी अभिजात वर्ग र सिनावात्रा परिवारबीचको संघर्षको घेरामा छ। सिनावात्रा परिवारलाई थाइल्यान्डको परम्परागत सामाजिक संरचनाका लागि चुनौतीका रूपमा हेरिन्छ।

पूर्व प्रधानमन्त्री थाक्सिन सिनावात्रा, जो पेटोङटार्नका पिता हुन्, सन् २००६ मा सैन्य 'कू' पछि पदच्युत भएका थिए। उनका सुधारवादी तथा गरीबमुखी कार्यक्रमहरू लोकप्रिय भए पनि उनीमाथि राज्यको परम्परागत संरचनामा खलल पुर्‍याएको आरोप लाग्यो।

थाक्सिनपछि उनकी बहिनी यिंगलक सिनावात्राले सन् २०११ मा प्रधानमन्त्री पद सम्हालेकी थिइन्। तर सन् २०१४ मा उनलाई पनि संवैधानिक उल्लङ्घनको आरोपमा पदच्युत गरियो, र त्यसपछि सेनाले सत्तामा हस्तक्षेप गर्‍यो।

संवैधानिक अदालतको विवादास्पद भूमिका

थाइल्यान्डको संवैधानिक अदालत विगत दुई दशकदेखि देशको राजनीतिमा निर्णायक भूमिका खेल्दै आएको छ। अदालतलाई संविधानको व्याख्या गर्ने अधिकार छ, साथै प्रधानमन्त्री वा मन्त्रीहरूको नैतिकता उल्लङ्घन भए-नभएको निर्णय गर्ने हैसियत पनि।

सिनावात्रा परिवारका विरोधीहरू अदालतलाई सत्ता सन्तुलनको रक्षक मान्छन्, तर आलोचकहरूका अनुसार, यो संस्था स्वतन्त्र नभई सत्ता पक्षको प्रभावमा सञ्चालन हुन्छ। अघिल्ला निर्णयहरूमा यिंगलक सिनावात्रालाई हटाउनु, थाई राख थाई पार्टीजस्ता सिनावात्रा समर्थक दलहरू विघटन गर्नु, र नेताहरूलाई राजनीति गर्न प्रतिबन्ध लगाउनु जस्ता कदमहरू सामेल छन्।

लोकतन्त्र बनाम रूढीवादको द्वन्द्व

राजनीतिक विश्लेषकहरूका अनुसार, थाइल्यान्डको वर्तमान अवस्था दुई विचारधाराबीचको संघर्ष हो–एकतर्फ लोकप्रिय मतबाट निर्वाचित सुधारवादी सरकार, अर्कोतर्फ सेना, शाही दरबार र रूढीवादी अभिजात वर्गद्वारा नियन्त्रित संस्थागत संरचना।

पेटोङटार्नको निलम्बन पनि सोही संघर्षको पछिल्लो कडी हो। जबसम्म संवैधानिक अदालतको अन्तिम फैसला आउँदैन, थाइल्यान्डको राजनीतिक अनिश्चितता कायम रहने देखिन्छ। -एजेन्सीको सहयोगमा

# पिज्जा र युद्धको अनौठो संयोग !

काठमाडौं । मध्यपूर्वमा इजरायल र इरानबीचको हालैको सैन्य तनावसँगै, एक पुरानो तर अनौठो सैद्धान्तिक ट्रेन्ड पुनः सामाजिक सञ्जालमा चर्चाको केन्द्रमा आएको छ – 'पिज्जा इन्डेक्स'। यो कुनै नयाँ खानाको ट्रेन्ड होइन, बरु एक विशिष्ट दृष्टिकोण हो, जसले अमेरिकी रक्षा मन्त्रालय (पेन्टागन) वरपर अचानक पिज्जाको बिक्री बढ्नु ठूला सैन्य कारबाहीको संकेत हुनसक्ने दाबी गर्छ।

हालै, सामाजिक सञ्जाल 'एक्स' (पूर्व ट्वीटर) मा सक्रिय एक अज्ञात प्रयोगकर्ताले यस्तो दाबी गरेका छन् कि इजरायलले इरानमाथि आक्रमण सुरु गर्नु अघि वाशिङ्टन डीसीमा रहेको पेन्टागन नजिकका तीन प्रमुख पिज्जा रेस्टुरेन्टहरूमा पिज्जा अर्डर एकाएक बढेको थियो।

उनका अनुसार, बन्द हुने तयारीमा रहेको "म्ष्कतचष्अत एष्शशब एबबिअभ" मा समेत भीड बढेको थियो भने व्हाइट हाउस नजिकैको म्फष्लय'क मा पनि सामान्य दिनभन्दा धेरै अर्डर भएको देखिएको थियो।

यस घटनाले 'पिज्जा इन्डेक्स' को अवधारणा पुनः चर्चामा ल्याएको हो। सिद्धान्तका समर्थकहरू भन्छन्, यस्ता संयोगहरू अघिल्लो दशकहरूमा पनि देखिइसकेका छन्। उदाहरणस्वरूप, सन् १९९० मा इराकले कुवेतमा आक्रमण गर्नु अघि, र १९९१ मा अमेरिकी सैन्य अभियान इउभचबतष्यल म्भकभचत क्तयचक सुरु हुनु पूर्व, वाशिङ्टन डीसीमा पिज्जाको बिक्रीमा उल्लेखनीय वृद्धि देखिएको थियो। डोमिनोजका पूर्व मालिक फ्र्यांक मिक्स का अनुसार, त्यस्ता घटनाहरू सैन्य गतिविधिसँग सम्बन्धित तयारीको सूचक हुन सक्छन्। विश्लेषकहरूका अनुसार, युद्धसम्बन्धी निर्णय लिने बेला पेन्टागनका अधिकारीहरू कार्यालयमा नै लामो समयसम्म बस्ने भएकाले, छिटो र सजिलो खानाको विकल्पको रूपमा पिज्जाको माग बढ्ने गर्दछ।

पछिल्लो पटक इजरायलले इरानमाथि आक्रमण गर्दा पनि अमेरिका भित्र पिज्जाको बिक्रीमा वृद्धि देखिनुले फेरि प्रश्न उठाएको छ – के उक्त आक्रमणमा अमेरिका प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा संलग्न थियो?

-एजेन्सीको सहयोगमा

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

# सम्पादकीय

## एसईई नतिजा र नेपालको शिक्षा प्रणाली

*राष्ट्रिय परीक्षा बोर्डद्वारा सार्वजनिक २०८१ सालको माध्यमिक शिक्षा परीक्षा (एसईई) नतिजाले फेरि एकपटक हाम्रो शिक्षा प्रणालीको यथार्थतर्फ संकेत गरेको छ। झन्डै ४० प्रतिशत विद्यार्थी अझै पनि वर्गीकरणमा अटाउन सकेका छैनन्, जसले हाम्रो विद्यालय शिक्षाको गुणस्तरमा गम्भीर प्रश्न उठाएको छ।*

*यो वर्ष ४ लाख ३८ हजार ८९६ नियमित परीक्षार्थीमध्ये २ लाख ७१ हजार २९९ जना मात्रै विभिन्न श्रेणीमा उत्तीर्ण भएका छन्। बाँकी १ लाख ६७ हजार ५९७ जना 'अवर्गीकृत' घोषित भएका छन्, जसको अर्थ ती विद्यार्थीले न्यूनतम आवश्यक ग्रेड पनि हासिल गर्न सकेनन्। यद्यपि, गत वर्षको तुलनामा यसपटक पास हुनेको अनुपात ६१.८१ प्रतिशत पुगेको छ, जुन अघिल्ला वर्षहरूमा करिब ५० प्रतिशत हाराहारीमा सीमित थियो। यो अंकले केही सुधारको सङ्केत गरे पनि गहिरिएर हेर्दा समस्या अझै ज्यूँका त्यूँ रहेको प्रष्ट हुन्छ।*

*निजी र सरकारी विद्यालयबीचको प्रदर्शनको विश्लेषण नतिजामा सार्वजनिक गरिएको छैन। तर विगतको अनुभवका आधारमा निजी विद्यालयहरूको नतिजा सधैं तुलनात्मक रूपमा राम्रो देखिएको छ। यस वर्ष सरकारी विद्यालयहरूले केही सुधार गरेको अनुमान गर्न सकिए तापनि तथ्यांक अभावले ठोस निष्कर्ष निकाल्न कठिन बनाएको छ।*

*शिक्षाको गुणस्तरमा निजी क्षेत्रको योगदान उल्लेखनीय रहेको छ। विडम्बना, यिनै विद्यालयहरू प्रायः राजनीतिक आलोचनाको केन्द्र बन्दै आएका छन्। संसददेखि सञ्चारमाध्यमसम्म कतिपय 'अतिवादी' विचारधाराले निजी विद्यालयहरूको अस्तित्वमाथि नै प्रश्न उठाएका छन्। तर, यथार्थमा शिक्षा क्षेत्रमा निजी क्षेत्रलाई निषेध गर्ने सोच अनुचित मात्र होइन, असंवैधानिक पनि हो। प्रतिस्पर्धाको वातावरण सिर्जना गरी सरकारी विद्यालयहरूलाई सुधारतर्फ उन्मुख गराउनु नै दीर्घकालीन समाधान हो।*

*इतिहासले पनि देखाएको छ–२०२८ सालको 'राष्ट्रिय शिक्षा योजना' लागू गरी समुदायद्वारा सञ्चालित विद्यालयहरूको राष्ट्रियकरण गरिएपछि नेपालको शैक्षिक गुणस्तर ओरालो लागेको हो। आजका सांसदहरू त्यही शिक्षा प्रणालीबाट हुर्किए तापनि त्यही गल्ती दोहोर्याउने दिशामा उन्मुख देखिनु दुर्भाग्यपूर्ण छ।*

*अबको प्राथमिकता स्पष्ट हुनुपर्छ–राज्यको ढुकुटीबाट तलब लिने शिक्षकहरूको जवाफदेहिता सुनिश्चित गर्दै सरकारी विद्यालयको उपलब्धीमा सुधार ल्याउने। माध्यमिक शिक्षा परीक्षा प्रदेशस्तरमा गराउने जस्ता संरचनागत सुधारको बहस पनि अगाडि सारिनुपर्छ।*

*साथै, असफल भएका विद्यार्थीहरूलाई पुनः प्रयास गर्न प्रेरित गरिनुपर्छ। उनीहरूको असफलता केवल व्यक्तिगत होइन, प्रणालीगत हो भन्ने बुझ्न जरुरी छ। अभिभावक, शिक्षक र विद्यालय प्रशासनले संयुक्त प्रयास नगरी यसमा सुधार सम्भव छैन।*

*रुपन्देहीको तिलोत्तमास्थित शान्ति नमुना माध्यमिक विद्यालयका १८ विद्यार्थीले ४.० जीपीए ल्याउनु उदाहरणीय छ, जुन प्रतिबद्धता, व्यवस्थापन र सामूहिक प्रयासको परिणाम हो। यस्ता विद्यालयहरूको अभ्यासबाट सिकेर देशभरको विद्यालय सुधार गर्न सकिन्छ।*

*अन्ततः, सफल परीक्षार्थीलाई हार्दिक बधाई! असफललाई पनि निराश हुनुपर्ने कुनै कारण छैन– परिश्रम, आत्मविश्वास र सुधारको इच्छा राखे असफलता क्षणिक बन्न सक्छ। राष्ट्रको भविष्य शिक्षामा भर पर्ने हुँदा अब समय आएको छ–शिक्षालाई प्राथमिकता दिने, नतिजाभन्दा प्रक्रियामा सुधार ल्याउने, र सबै क्षेत्रको योगदानलाई सम्मान गर्ने।*

# इरानको क्रान्ति र निरकुश शासन : नेपालले सिक्नुपर्ने पाठ

● वेदप्रकाश तिमिल्सैना

इरान सधैँ विश्व राजनीतिको केन्द्रविन्दुमा रहँदै आएको छ । शिया इस्लाम धर्म मान्ने मुस्लिमहरूको बाक्लो जनसङ्ख्या भएको यो देश प्राचीन सभ्यता र अपार प्राकृतिक स्रोतका लागि परिचित छ। विशेषगरी, इरानको विशाल तेल भण्डारले यसलाई विश्व अर्थतन्त्रमा विशिष्ट स्थान दिएको छ । देशको शासन प्रणालीमा सर्वोच्च नेता अयातुल्लाह अली खोमेनेइको निर्णायक प्रभाव छ । जसका निर्देशनहरूले इरानको आन्तरिक र बाह्य नीतिहरू निर्धारण गरिन्छ ।

हाल विश्वको ध्यान इरान, इजरायल र अमेरिकाबीचको तनावमा केन्द्रित छ । सञ्चार माध्यम र सामाजिक सञ्जालहरूमा यी सम्बन्धका घटनाहरूले प्रचण्ड चर्चा पाएका छन् । यस्तो विवाद नेपालमा समेत पुगिसकेको छ, जहाँ मानिसहरू इरानका राजनीतिक घटनाक्रमलाई चासोका साथ हेर्दैछन् । यद्यपि भौगोलिक रूपमा टाढा भए पनि नेपाल र इरानबीच केही ऐतिहासिक र सांस्कृतिक समानताहरू पाइन्छन् ।

केही मानवशास्त्रीहरूले इरानलाई नेपालका आर्य पुर्खाहरूको मूलभूमि मानेका छन्, जसले दुई देशबीच सांस्कृतिक सम्पर्कको सम्भावना देखाउँछ । जसको चर्चा नेपालसम्म पनि हुन्छ । यद्यपि उहिले असल दौत्य सम्बन्ध भएका नेपाल र इरानबीच दिर्घकालीन गहिरो सम्बन्ध छैन । तर, मध्यपूर्वका अन्य देशहरूमा जस्तै रोजगारीका लागि नेपाली युवाहरू त्यहाँ पुगेका छन् । तथापि, इरानमा नेपालीहरूको सङ्ख्या थोरै छ ।

हाल उपलब्ध तथ्याङ्कअनुसार, इरानमा करिब २० नेपाली नागरिक छन्, जसमा रोजगारीमा १५ र विभिन्न कारणले जेलमा ५ जना छन्। कठोर इस्लामी कानून र राजनीतिक अस्थिरताका कारण नेपालीहरू इरानलाई रोजगारीको गन्तव्यको रूपमा प्राथमिकता नदिएको स्पष्ट छ ।

इरान र नेपालबीच भिन्नताहरू थुप्रै छन् । भूगोल, धर्म, शासनप्रणाली, संस्कृतिदेखि सामाजिक संरचनासम्म । यद्यपि केही गहिरा समानताहरू छन्, जुन इतिहास र मानव उत्पत्तिका सन्दर्भमा उल्लेखनीय छन् । इरानलाई कतिपय मानवशास्त्री र इतिहासकारहरूले हाम्रो पुर्खाको भूमि मानेका छन् । आर्य सभ्यताको प्रसारसँगै, दक्षिण एशिया र मध्य एशियाका बीचको सांस्कृतिक एवं जातीय सम्बन्ध झल्किन्छ ।

यिनै सन्दर्भहरूमा भनिएको पाइन्छ कि, नेपालमा बसोबास गर्ने कतिपय जाति र समुदायका पूर्वजहरू कुनै समय इरान क्षेत्र हुँदै हिमालयतर्फ सरेका थिए । त्यसैले इरान केवल टाढाको देश मात्र होइन हाम्रो ऐतिहासिक स्मृतिको एउटा बिन्दु पनि हो । मानव सभ्यताको यात्रामा, इरान र नेपालबीचको सम्बन्ध कुनै न कुनै रूपमा जोडिएको पाइन्छ ।

इरानको राजनीतिक इतिहासले नेपाललाई सिकाउने गहिरा पाठहरू समेटेको छ । लामो समय राजतन्त्रमा जीवन बिताएका इरानी जनताले स्वतन्त्रता र न्यायको खोजीमा क्रान्ति गरेका थिए । १९७९ को जनताको क्रान्ति विशेष गरी भ्रष्टाचार र दमनको विरुद्धमा थियो । त्यो समयका विद्यार्थीहरूले पश्चिमी गीतहरू बजाउँदै सडकमा आन्दोलन गरे । लोकतान्त्रिक व्यवस्था र नागरिक स्वतन्त्रताको माग गरे ।

यद्यपि त्यो राजतन्त्र पूर्ण लोकतान्त्रिक थिएन। नागरिकहरूलाई केही हदसम्म व्यक्तिगत स्वतन्त्रता थिए । त्यसै वर्ष सन् १९७९ मा विशाल जनआन्दोलनको दबाबमा इरानका शाह मोहम्मद रजा पहलवीले सत्ता त्याग्न बाध्य भए । शाहको शासनकालमा चरम भ्रष्टाचार, असमानता र अमेरिकी प्रभावको कारण जनतामा आक्रोश बढेको थियो ।

राजतन्त्र अलोकतान्त्रिक थियो । तर केही हदसम्म व्यक्तिगत स्वतन्त्रता भने नागरिकले भोग्न पाएका थिए । लोकतान्त्रिक व्यवस्था र नागरिक अधिकारको माग गर्दै सहर सहरमा प्रदर्शनहरू चर्किएका थिए । विद्यार्थी, महिलाहरू, मजदुर र मध्यम वर्गका मानिसहरू स्वतन्त्रता र सुधारको आशमा आन्दोलनमा उत्रिएका थिए ।

यद्यपि आन्दोलनमा सुरुदेखि नै धार्मिक वर्ग विशेष गरी शिया इस्लामी धर्मगुरुहरूको उपस्थितिले भविष्यमा सत्ताको स्वरूप कुन दिशामा मोडिनेछ भन्ने सङ्केत दिएको थियो । यस जनआन्दोलनको नेतृत्व अन्तत अयातुल्लाह रुहोल्लाह खोमेनीजस्ता धार्मिक विद्वानहरूको हातमा पुग्यो । खोमेनी, जो तत्कालीन इरानको धर्मिक समाजमा अत्यन्त प्रभावशाली थिए । क्रान्तिको प्रतीक बने र फ्रान्सको निर्वासनबाट फर्किएपछि नै उनी सत्ताको केन्द्रमा आए ।

उनको उपस्थितिले आन्दोलनलाई धार्मिक रूप दियो, र राजनीतिक स्वतन्त्रता खोज्नेहरूको अपेक्षा उल्टो मोडियो । शाहको राजतन्त्रको अन्त्यले नागरिकहरूलाई स्वतन्त्रताको आशा त दिलायो तर क्रान्तिपछि स्थापित 'इस्लामी गणराज्य' झन् कठोर र केन्द्रीकृत निकाय बन्यो । यसरी राजा मोहम्मद रजा पहलवी गद्दीबाट हटेपछि खाली भएको सत्ता कट्टरपन्थी धर्मगुरुहरूले सम्हाले ।

त्यसको परिणामस्वरूप इरान एक कठोर धार्मिक शासनतर्फ गयो । जुन धेरै आन्दोलनकारीहरूले सुरुवातमा कल्पनासमेत गरेका थिएनन् । सत्तामा धार्मिक कट्टरपन्थीहरू प्रभावशाली भएर उदाए । नयाँ शासनले कठोर शरिया कानुन लागू गऱ्यो । राज्यले 'विलायत-ए-फकिह' नामक धार्मिक विद्वानद्वारा शासन प्रणाली अपनायो । जसमा सर्वोच्च नेताको भूमिका अत्यन्त सशक्त र केन्द्रीकृत रह्यो । रुहोल्लाह खोमेनीले एक दशकसम्म इरानको सर्वोच्च नेताको रूपमा शासन सम्हाले ।

उनको निधनपछि १९८९ मा अयातुल्लाह अली खोमेनेइले पदभार सम्हाले र आजसम्म पनि उनी सत्ता केन्द्रित छन् । खोमेनेइले इस्लामिक रिभोलुसनरी गार्ड स्थापना गरे । जसले राजनीतिक, सैन्य र सामाजिक क्षेत्रमा ठूलो प्रभाव राख्छ । साथै, 'मोरल पुलिस' को स्थापना गरी नागरिकहरूको निजी जीवनमा पनि कडाइ गरियो । यद्यपि इरानमा राष्ट्रपति निर्वाचित हुन्छन्, तर अधिकांश निर्णायक अधिकार सर्वोच्च नेताको हातमा छ ।

लोकतन्त्रको आशामा सडकमा निस्केका इरानी नागरिकहरूलाई दुवै सर्वोच्च नेताले निराश बनाए । खोमेनेइ र खएनीको उदयपछि त्यहाँका नागरिकले आफ्नो स्वतन्त्रता गुमाए । महिला माथि कडा नियमन आयो । हिजाब अनिवार्य गरियो । र, अभिव्यक्ति स्वतन्त्रता अत्यन्त सीमित भयो । प्रेस स्वतन्त्रता खतरामा पऱ्यो । र आलोचना गर्नेहरूलाई दमन गरियो । राजतन्त्रको तुलनामा नयाँ शासन प्रणालीमा जनताको अधिकार झनै कम भयो । धार्मिक सर्वोच्चताका नाममा आलोचना गर्नेहरूलाई कठोर सजायको सामना गर्नुपऱ्यो । जसले सामाजिक भय र दमनको वातावरण सिर्जना गऱ्यो ।

महिलाहरूको अवस्था विशेषगरी चिन्ताजनक रह्यो । शिक्षा, रोजगार र सार्वजनिक जीवनमा उनीहरूको पहुँचमा कटौती गरियो । पुरुषप्रधान कानुनले महिला अधिकारमा प्रतिबन्ध लगायो र 'मोरल पुलिस' ले सामाजिक जीवनमा नियन्त्रण बढायो । शिक्षित र सचेत महिलाहरू पनि आफ्नो आवाज दबाउन बाध्य भए । यस्ता परिस्थिति एकदमै निराशाजनक थिए ।

इरानको आर्थिक अवस्था पनि झन् खराब बन्दै गयो । अन्तर्राष्ट्रिय प्रतिबन्ध, भ्रष्टाचार र पारदर्शिताको अभावले गर्दा देशको अर्थतन्त्र जर्जर भयो । तेल उत्पादनको बावजूद पनि जनतालाई भोकमरी, महँगो वस्तुहरू र बेरोजगारीको सामना गर्नु परेको छ । युवावर्ग विदेश पलायन हुन बाध्य छन् । जसले ' ब्रेन ड्रेन' लाई तीव्र बनाएको छ र उत्पादनशीलतालाई कमजोर पारेको छ ।

सरकारले जनताको जीवनस्तरभन्दा सामाजिक नियन्त्रणलाई प्राथमिकता दिएको छ । महिलाले टाउको ढाक्नुपर्ने नियमको पालना भए कि भएन भनेर 'मोरल पुलिस' कडाइ गर्दैछ । यसरी राज्यले व्यक्तिगत स्वतन्त्रतालाई कठोरतापूर्वक नियन्त्रण गरिरहेको छ । उहिले अंग्रेजी गीत बज्ने तेहरानमा मोरल पुलिसले कडा निरीक्षण गरिरहेको हुन्छ । त्यहाँ कसले कस्तो कपडा लगाएको छ भनेर मोरल पुलिसले निगरानी गरिरहेको हुन्छ ।

तीन वर्षअघि महसा अमिनी २२ वर्षकी युवती इरानको कुर्द क्षेत्रबाट तेहरान आएकी थिइन् । उनलाई मोरल पुलिसले राजधानीको सडकमा 'अशुद्ध तरिकाले हिजाब लगाएको' आरोपमा गिरफ्तार गरेको थियो । उनको हिरासतमा मृत्यु भयो । उनको मृत्युपछि इरानमा महिला, युवा विद्यार्थी सडकमा आए । महसा अमिनीको हत्यापछि सुरु भएको आन्दोलनलाई 'इरानको दोस्रो क्रान्ति' पनि भनिएको छ ।

सन् १९७९ को क्रान्तिपछि यो नै सबैभन्दा व्यापक विरोध आन्दोलन थियो । शान्तिपूर्ण विरोध प्रदर्शन गरिरहेका नागरिकमाथि खोमेनेइले निर्मम दमन गरे । तथाकथित सर्वोच्च नेताको आदेशमा सयौंको सङ्ख्यामा प्रदर्शनकारी मारिए । हजारौं जेल परे । र, धेरै महिलालाई अमानवीय यातना भोग्न बाध्य बनायो । इरानमा दुई प्रकारका सेना छन्– एक औपचारिक राष्ट्रिय सेना र अर्को खोमेनेइको नियन्त्रणमा रहेको 'रिभोलुसनरी गार्ड ।'

यी दुवै सङ्गठनले राष्ट्रिय सुरक्षाभन्दा व्यक्तिगत र धार्मिक सत्ता संरक्षणलाई प्राथमिकता दिएका छन्। इरानमा राष्ट्रपति र उपराष्ट्रपति पनि छन्, तर ती पदहरू प्राय नाम मात्रका हुन् । यो प्रणाली हाम्रो उहिलेको पञ्चायती व्यवस्था जस्तो देखिन्छ । जहाँ प्रधानमन्त्रीसहित मन्त्रीपरिषद् भए पनि वास्तविक सत्ता दरबारमा केन्द्रित हुन्थ्यो । इरानमा पनि देखाउनका लागि राष्ट्रपति, उपराष्ट्रपति सहितको मन्त्रीमण्डल छ । तर शासनको बागडोर पूर्ण रूपमा सर्वोच्च नेता अयातुल्लाह अली खोमेनेइको हातमा छ ।

राजनीतिक निर्णय र प्रशासनिक कार्यहरूमा राष्ट्रपति र मन्त्रिपरिषद्को भूमिका सीमित छ । सर्वोच्च नेता (जसले धार्मिक र राजनीतिक दुवै अधिकारहरू सम्हाल्छ) ले देशको आन्तरिक र बाह्य नीति निर्धारण गर्दछ । इरानको वर्तमान संरचनाको शासन उहिलेको राजतन्त्रभन्दा पनि बढी निरङ्कुश छ । यसले नागरिकहरूमा असुरक्षाको भावना फैलाएको छ । यद्यपि राजालाई भ्रष्टाचारको आरोप लगाएर हटाइएको थियो । तर राजन्त्रको विकल्पमा आएको शासन व्यवस्था झन बढी निरङ्कुश र दमनकारी बनेको छ । जनताको राजनीतिक अधिकार र स्वतन्त्रता सीमित बन्यो । जसले राजनीतिक अस्थिरता र सामाजिक तनावलाई थप गहिरो बनायो ।

आन्दोलन व्यवस्थापन हुन नसक्दा परिवर्तनको मूल उद्देश्यहरू पूरा भएनन् । नेपालमा पनि अहिले केही समूहहरूले राजनीतिक दलहरूको कमजोरी र भ्रष्टाचारको आधारमा राजतन्त्रको पुनस्थापना गर्न खोजिरहेका छन् । यद्यपि, पुरानो निरङ्कुश शासन प्रणालीमा फर्किनु भनेको अधिकार र स्वतन्त्रताको पुनः हानी हो । सङ्घीय लोकतान्त्रिक व्यवस्थामा सुधार गरेर मात्र दीर्घकालीन समाधान सम्भव छ । निरङ्कुश शासनमा सुधार गर्ने सम्भावना न्यून छ ।

इरानको अनुभवले नेपाललाई स्पष्ट सङ्केत दिएको छ कि व्यवस्था परिवर्तनमा दूरदर्शिता र सचेत रणनीति आवश्यक हुन्छ । अधिकार गुम्ने अवस्था आउन नदिन जनतामा जागरूकता र लोकतन्त्रप्रति विश्वास कायम राख्नुपर्छ । नेपालमा गणतन्त्रको विकल्प राजतन्त्र होइन । यसले जनताको अधिकारको रक्षा गर्दछ र लोकतान्त्रिक सिद्धान्तलाई बलियो बनाउँछ ।

नेपालमा जनताको लामो सङ्घर्षपछि मात्र राजतन्त्र हटाएर गणतन्त्र स्थापित गरिएको हो । आजको चुनौती यस व्यवस्थामा सुधार ल्याउनु हो । पुरानो प्रणालीमा फिर्ता नजानु हो । राजनीतिक नेतृत्व र व्यवस्थामा सुधार गर्नुपर्ने भए पनि मूल व्यवस्थाको अवमूल्यन गर्नु उपयुक्त छैन । निर्वाचनमार्फत् जनताले असल नेतृत्व चयन गर्न सक्ने अधिकार राख्छन् ।

नेताहरूको विगत मूल्याङ्कन गरी सही निर्णय लिने अवसर लोकतन्त्रले प्रदान गरेको छ । यसैले जनताले सचेत भएर मतदान गर्नु आवश्यक छ । राजनीतिमा विकल्प हुनु लोकतन्त्रको आधार हो र यसबाट नै समाजमा सकारात्मक परिवर्तन सम्भव छ। राजतन्त्र फिर्ता गर्नु भनेको अन्धकार र निरङ्कुशतामा फिर्ता जानु हो । यसले अभिव्यक्ति स्वतन्त्रता समाप्त पार्छ । प्रेसलाई नियन्त्रणमा ल्याउँछ र अदालतलाई दरबारको अधीन बनाउँछ ।

यस्तो स्थिति संविधान र नागरिक अधिकारको पूर्ण उलङ्घन हो । हिजो हामी प्रजा थियौं । आज नागरिक भएका छौं । यस फरकलाई बुझेर मात्र समृद्धि र स्वतन्त्रताको मार्ग अपनाउन सकिन्छ । नेतृत्वको कमजोरी देखेर पूरै व्यवस्थालाई दोष दिने सोचले मात्र विगतको त्रुटि दोहोऱ्याउने खतरा बढ्छ । 'सौताको रिसले ओछ्यानमा पिसाब गर्नु हुँदैन' भन्ने नेपाली उखान यहाँ प्रासङ्गिक छ। व्यवस्था होइन, नेतृत्व सुधार्नुपर्ने आवश्यकता छ ।

अन्ततः निष्कर्ष के हो भने, नेपालमा लोकतान्त्रिक गणतन्त्रको विकल्प राजतन्त्र हुन सक्दैन । यदि राजतन्त्र फर्काइयो भने त्यसलाई हटाउन कठिन हुन्छ र त्यसले पुनः दमन र कुशासनको पुनरागमन गराउँछ । त्यसैले सचेत नागरिकका रूपमा हामीले लोकतन्त्रको संरक्षण र सुदृढीकरणमा ध्यान दिनुपर्छ । लोकतन्त्रलाई निरन्तरता दिनु नै राष्ट्रिय समृद्धि, स्वतन्त्रता र न्यायको सुनिश्चितता हो ।

नेपालका लागि इरानको अनुभव एउटा गहिरो पाठ हो। जहाँ जनताको सङ्घर्षले राजतन्त्र त हटायो। तर विकल्पमा आएको शासन अझ कठोर बन्यो। स्वतन्त्रताको नाममा गरिएको क्रान्तिले स्वतन्त्रता झनै घटाइदियो । यसबाट सिक्नुपर्ने कुरा के छ भने व्यवस्था परिवर्तन मात्रै होइन । परिवर्तनपछिको बाटो, नेतृत्व, नीति र अभ्यासमा पनि जनता सचेत हुनुपर्छ। विकल्पको खोजी गर्दा विगतका गल्ती नदोहोरिने गरी सोच्न सक्नुपर्छ।

नेपालमा गणतन्त्र आएको दशकभन्दा बढी समय भइसक्दा पनि अपेक्षित सुधार हुन नसकेको जनगुनासो रहनु स्वाभाविक हो। तर यसै आधारमा निरङ्कुश व्यवस्थाको पुनरागमन चाहनु भोलिका पुस्ताको अधिकारमाथिको खिल्ली हुनेछ। त्यसैले स्पष्ट छ, लोकतन्त्र आफैंमा दोषी होइन । दोष राजनीतिक अभ्यास र नेतृत्वको छ । गणतन्त्रलाई बलियो बनाउने उपाय भनेको निरन्तर सुधार, जवाफदेहिता र जनसंवेदनशीलता कायम राख्नु हो । नागरिकको भूमिका पनि अत्यन्त महत्त्वपूर्ण हुन्छ। विवेकपूर्वक मतदान गर्नु, अधिकारको रक्षा गर्नु, र व्यवस्थाभित्रैबाट सुधारको माग गर्नु आजको आवश्यकताको केन्द्रमा छ। हामीले परिवर्तनका नाममा निरङ्कुशता भित्र्याउने हो भने त्यो फेरि हटाउन गाह्रो हुन्छ। त्यसैले लोकतन्त्रलाई कमजोर बनाउने होइन, सक्षम बनाउनेतर्फ सबैको ध्यान जानुपर्छ। लोकतन्त्रको संरक्षण र सुधारमा नै दीर्घकालीन समाधान छ । नत्र निरङ्कुशता फेरि जन्मिन सक्छ।

इरानमा राजालाई सत्ताबाट हटाउनु ठीक थिएन । किनभने त्यसपछि आएको शासन अझ बढी निरङ्कुश र केन्द्रीकृत भयो । नेपालमा पनि गणतन्त्रको विकल्पमा राजतन्त्र फर्काउने अभियान गलत हो । लोकतन्त्रलाई बलियो बनाउँदै अघि बढ्नुपर्छ । पुरानो निरङ्कुश राजतन्त्रमा फिर्ता जाने बहस निरर्थक नै हो । इरानले सिकाएको यथार्थ र नेपालले लिनुपर्ने पाठ यही हो ।

खबरहबबाट

# अमेरिकी सहायता कटौतीले २०३० सम्म १ करोड ४० लाखभन्दा बढीको ज्यान जान सक्ने जोखिम



काठमाडौं, । अमेरिकी विदेशी सहायता कटौतीका कारण सन् २०३० सम्म विश्वभर १ करोड ४० लाखभन्दा बढी मानिसको ज्यान जान सक्ने एक नयाँ अध्ययनले चेतावनी दिएको छ। अन्तर्राष्ट्रिय अनुसन्धान टोलीद्वारा गरिएको यो अध्ययन मंगलबार प्रकाशित भएको हो।

ल्यान्सेट जर्नलमा प्रकाशित रिपोर्टका अनुसार मृत्यु हुनेहरूको एक तिहाइभन्दा बढी साना बालबालिका हुने अनुमान गरिएको छ। यो अध्ययन संयुक्त राष्ट्रसंघको स्पेनमा भइरहेको सम्मेलनलाई लक्षित गरी सार्वजनिक गरिएको हो, जहाँ सहायता प्रणालीलाई बलियो बनाउने विषयमा छलफल भइरहेको छ।

डोनाल्ड ट्रम्प प्रशासनले विदेशी सहायता नीतिमा कटौती गरेपछि त्यसको गम्भीर मानवीय असर देखिन थालेको अध्ययनकर्ताहरूले औंल्याएका छन्। ट्रम्पले पुनः ह्वाइट हाउस फर्कनुअघि, अमेरिकी अन्तर्राष्ट्रिय विकास एजेन्सी (ग्क्बक्ष्म) ले विश्वभर मानवीय सहायता कोषको ४० प्रतिशतभन्दा बढी हिस्सा पुर्‍याउँदै आएको थियो।

ट्रम्पका निकट सल्लाहकार एलन मस्कले सहायता एजेन्सीमाथि आक्रमण गर्दै त्यसलाई ' काठ काट्ने मेसिनमा हालेको' भनी टिप्पणी गरेका थिए।

**दुई दशकको प्रगति उल्टिन सक्ने जोखिम**

बार्सिलोना इन्स्टिच्युट फर ग्लोबल हेल्थ (ISGlobal) का अनुसन्धानकर्ता तथा सह-लेखक डेभिडे रसेलाका अनुसार सहायता कटौतीले जोखिममा रहेका जनसंख्याको स्वास्थ्यमा विगत दुई दशकको प्रगति नै उल्टिन सक्ने खतरा देखिएको छ।

'धेरैजसो निम्न तथा मध्यम आय भएका देशहरूका लागि यसको असर महामारी वा ठूला सशस्त्र द्वन्द्वको तुलनामा हुने छ,' उनले भने।

२००१ देखि २०२१ सम्मको तथ्यांक विश्लेषण गर्दा अध्ययनकर्ताहरूले USAID कोषले झन्डै ९ करोड १८ लाखको मृत्यु रोक्न मद्दत गरेको पत्ता लगाएका छन्। यो सङ्ख्या दोस्रो विश्वयुद्धमा मारिएको अनुमानित जनसंख्याभन्दा बढी हो।

**रोग फैलन र मृत्युदर बढ्ने चिन्ता**

अध्ययनमा विशेषगरी एचआईभी, मलेरिया र क्षयरोग जस्ता रोगहरूको संक्रमण तथा मृत्युदरमा सहायता कटौतीको असर देखाइएको छ।

USAID बाट उच्च सहायता पाउने देशहरूमा एचआईभी/एड्सबाट हुने मृत्यु ६५ प्रतिशतले कम भएको थियो भने मलेरिया तथा अन्य उष्णकटिबन्धीय रोगहरूबाट मृत्यु लगभग आधा घटेको थियो।

मोजाम्बिकस्थित म्यानहिका हेल्थ रिसर्च सेन्टरका सह-लेखक फ्रान्सिस्को साउटले USAID को सहयोगले सार्वजनिक स्वास्थ्य पूर्वाधार निर्माणमा कस्तो ठूलो योगदान गरेको हो भन्ने कुरा फाँटमै देखिएको बताएका छन्।

**घण्टामा ८८ जनाको मृत्यु**

बोस्टन विश्वविद्यालयका अनुसन्धानकर्ता ब्रुक निकोल्सद्वारा सञ्चालित एउटा ट्र्याकर अनुसार ग्क्बक्ष्म को कटौतीपछि हालसम्म लगभग १ लाख ८ हजार वयस्क र २ लाख २४ हजार बालबालिकाको मृत्यु भइसकेको अनुमान गरिएको छ।

यसले हरेक घण्टामा करिब ८८ जनाको मृत्यु भइरहेको देखाउँछ।

**युरोपेली मुलुकहरूले पनि कटौती गर्दै**

ग्क्बक्ष्म को सहयोग बन्द भएपछि फ्रान्स, जर्मनी र बेलायतलगायत प्रमुख दाताहरूले समेत आफ्नो विदेशी सहायता बजेट घटाउने योजना अघि सारेका छन्।

क्ष्क्नयिदर्बा का अध्ययन सह-लेखक क्याटरिना मोन्टीका अनुसार यस्ता कटौतीले विशेष गरी युरोपेली संघका निम्न आय भएका देशहरूमा मृत्यु दर अझै बढ्नसक्ने खतरा देखिन्छ।

**"अहिले बढाउने समय हो"**

यद्यपि अध्ययनकर्ताहरूले प्रक्षेपणहरू हालको सहायता प्रतिबद्धतामा आधारित रहेकाले स्थिति परिवर्तन सम्भव रहेको बताएका छन्।

स्पेनको सेभिल सहरमा भइरहेको सहायता सम्मेलनमा विश्वका नेताहरू सहभागी भइरहेका छन्। तर, संयुक्त राज्य अमेरिका भने सम्मेलनमा सहभागी छैन। 'अहिले सहायता कम गर्ने समय होइन, बरु बढाउने समय हो', अनुसन्धानकर्ता रसेलाले भने।

उनका अनुसार, USAID को कुल खर्च अमेरिकी संघीय बजेटको केवल ०.३ प्रतिशत थियो। लस एन्जलसस्थित क्यालिफोर्निया विश्वविद्यालयका सह-लेखक जेम्स म्याकिन्कोलेका अनुसार, अमेरिकीहरूले प्रतिदिन औसतमा १७ सेन्ट अर्थात वार्षिक करिब ६४ डलर मात्र यस्ता सहायतामा योगदान दिन्थे।

'त्यति सानो रकमले लाखौंको जीवन जोगाउन सकिन्छ भन्ने थाहा पाउँदा धेरै अमेरिकीहरूले यस्तो सहायतालाई निरन्तर समर्थन गर्नेछन्,' म्याकिन्कोलेले विश्वास व्यक्त गरे।

# कडा र नरम रूप फेर्न सक्ने "इलेक्ट्रोनिक मसी"को विकास : भविष्यका लचकदार उपकरण निर्माणमा क्रान्ति ल्याउने आशा




काठमाडौं । वैज्ञानिकहरूले एउटा नयाँ प्रकारको 'इलेक्ट्रोनिक मसी' विकास गरेका छन्, जसले तापक्रमअनुसार आफ्नो कडापन परिवर्तन गर्न सक्छ। यो मसीको प्रयोग गरेर यस्तो सर्किट छाप्न सकिनेछ, जुन तातो हुँदा कडा अवस्थाबाट नरम अवस्थामा रुपान्तरण हुनसक्छ।

यस प्रविधाले शरीरभित्र राखिने मेडिकल इम्प्लान्टहरूदेखि लचकदार रोबोटिक्ससम्मका क्षेत्रहरूमा नयाँ सम्भावनाको ढोका खोल्ने विश्वास वैज्ञानिकहरूको छ। यी उपकरणहरू प्रयोग हुने वातावरणअनुसार आफ्नो बनावट परिवर्तन गर्न सक्नेछन्–कतिपय अवस्थामा कडा, भने कतिपयमा पूर्णतः लचकदार।

ग्यालियम र पोलिमरको मिश्रणबाट बनेको मसी

अमेरिकास्थित लाइभसाइन्सका अनुसार, यो मसी ग्यालियम नामक धातु र पोलिमर-आधारित सोल्भेन्टको मिश्रणबाट बनेको हो। ग्यालियम एक विशेष धातु हो, जुन सामान्य तापक्रममा ठोस भए पनि ३० डिग्री सेल्सियसभन्दा तलमै पग्लन्छ। प्रयोग भएको सोल्भेन्ट तातो हुँदा बिस्तारै विघटन हुन्छ र मसीलाई सुचालक बनाउँछ। यही प्रक्रिया मार्फत सर्किटको कडापन पनि नियन्त्रित हुन्छ।

यस अनुसन्धानको विस्तृत विवरण प्रतिष्ठित क्अष्भलअभ ब्मखबलअभक पत्रिकामा २०२५ मे ३० मा प्रकाशित भएको हो।

कोरियाको प्ब्क्क्त विश्वविद्यालयका विद्युत् इन्जिनियरिङ्गका प्राध्यापक तथा सह-अनुसन्धानकर्ता जे-वुङ जियोङ भन्छन्, "यो मसीले व्यक्तिगत इलेक्ट्रोनिक्स, मेडिकल उपकरण र लचकदार रोबोटिक्समा नयाँ युगको सुरुवात गर्नेछ।"

'भेरिएबल स्टिफनेस' प्रविधिको अवधारणा

हालको प्रविधिमा अधिकांश इलेक्ट्रोनिक उपकरणहरू दुई खालका हुन्छन्–एकातर्फ स्मार्टफोन वा ल्यापटपजस्ता कडा तर उच्च कार्यक्षमता भएका; अर्कातर्फ लचकदार भए पनि कम प्रदर्शन दिने वेयरेबल डिभाइसहरू। यो मसी भने यी दुईको बीचको दूरी कम गर्ने लक्ष्यसहित निर्माण गरिएको हो।

ग्यालियम पूर्वदेखि नै यस्तो प्रयोगमा उपयुक्त मानिँदै आएको थियो, तर सतहमा बनेको अक्साइड तहका कारण यसको छपाइ सम्भव थिएन। वैज्ञानिकहरूले डाइमेथाइल सल्फोक्साइड नामक घोल प्रयोग गरी ग्यालियमका नानोकणहरूलाई पोलिमरमा मिसाउने तरिका विकास गरे। तातो हुँदा सोल्भेन्ट विघटन भई हल्का अम्लीय वातावरण बनाउँछ, जसले अक्साइड तह हटाएर ग्यालियम कणहरूलाई आपसमा गाभिन सहयोग गर्छ। परिणामस्वरूप, उच्च-रिजोल्युसन सर्किट बनाइन्छ।

मेडिकल र वेयरेबल उपकरणमा सफल परीक्षण

यस प्रविधिको परीक्षणका क्रममा ५० माइक्रोमिटर जति पातलो सर्किट छाप्न सफल गरिएको छ–मानव कपालभन्दा पनि पातलो। परीक्षणमा यो पदार्थ तातो हुँदा १,४०० गुणा बढी नरम भएको देखिएको छ। वैज्ञानिक टोलीले दुई प्रयोगात्मक उपकरण पनि निर्माण गरेका छन्–

सामान्य अवस्थामा कडा हुने, तर छालासँग सम्पर्क हुँदा नरम हुने वेयरेबल स्वास्थ्य उपकरण।

शल्यक्रिया गर्न सजिलो हुने गरी कडा अवस्थामा राखिने तर शरीरभित्र पुगेपछि नरम हुने मस्तिष्क इम्प्लान्ट।

उत्पादनमा सहजता

अनुसन्धानकर्ताहरूका अनुसार, यो मसी स्क्रिन प्रिन्टिङ र डिप कोटिङजस्ता प्रचलित निर्माण विधिहरूसँग मिल्ने भएकाले यसलाई भविष्यमा ३डी प्रिन्टिङमार्फत ठूलो मात्रामा उत्पादन गर्न सकिनेछ।

प्राध्यापक जियोङले भने, "लिक्विड मेटल प्रिन्टिङमा रहेका दीर्घकालीन चुनौतीहरू समाधान गर्दै हामीले मसीको अम्लीयता नियन्त्रणमार्फत ग्यालियम कणहरूलाई प्रभावकारी रूपमा जोड्न सकेका छौं। यसले गर्दा तापक्रममै सर्किट छाप्न र कडापनमा परिवर्तन गर्न सक्ने नयाँ सम्भावना जन्मिएको छ।"

# उच्च कोलेस्टेरोलको जोखिमः कारण, असर र समाधान



**– डा. माधव विष्ट, मुटुरोग विशेषज्ञ**

कोलेस्टेरोल शरीरका लागि आवश्यक चिल्लो पदार्थ हो, जुन कलेजोले उत्पादन गर्छ। यो कोषिकाको झिल्ली बनाउने, भिटामिन डी उत्पादन गर्न र हर्मोनहरू निर्माणमा आवश्यक हुन्छ। तर, कोलेस्टेरोलको मात्रा अत्यधिक भएमा यो शरीरका लागि खतरनाक बन्न सक्छ।

विशेषतः रगतमा कोलेस्टेरोलको मात्रा २०० मिलिग्राम प्रति डेसीलिटरभन्दा माथि पुगेमा यसलाई उच्च कोलेस्टेरोल मानिन्छ, जसले मुटु, मस्तिष्क र अन्य महत्वपूर्ण अंगहरूमा गम्भीर असर पार्न सक्छ।

**उच्च कोलेस्टेरोलले पार्ने असरहरू**

**१. मुटु रोग र हृदयघातको खतरा**

धमनीहरूमा कोलेस्टेरोल र अन्य पदार्थको लेदो जम्दै जाँदा ' एथेरोस्क्लेरोसिस' नामक अवस्था सिर्जना हुन्छ, जसले रक्तप्रवाहमा अवरोध ल्याउँछ। यदि लेदो फुट्यो वा धमनी पूर्णरूपमा बन्द भयो भने मायोकार्डियल इन्फार्कसन (हृदयघात) हुन सक्छ।

**२. मस्तिष्कघात (स्ट्रोक)**

मस्तिष्कमा रगत पुर्‍याउने धमनी अवरुद्ध हुँदा वा फुट्दा स्ट्रोक हुन्छ। उच्च कोलेस्टेरोलले इस्केमिक स्ट्रोकको जोखिम २५-३० प्रतिशतले बढाउँछ।

**३. उच्च रक्तचाप**

साँघुरो धमनीहरूमा रगत प्रवाह गर्न शरीरले बढी दबाब दिनुपर्छ, जसले उच्च रक्तचाप निम्त्याउँछ। यो मुटु र रक्तनलीहरूमा थप तनाव सिर्जना गर्छ।

**४. प्यान्क्रियाज र कलेजोमा असर**

कोलेस्टेरोल अत्यधिक भएमा प्यान्क्रियाज सुन्निन सक्छ, जसलाई प्याङ्क्रियाटाइटिस भनिन्छ। साथै, कलेजोमा चिल्लो जम्ने (फ्याटी लिभर) समस्या पनि देखिन्छ।

**कोलेस्टेरोल बढाउने प्रमुख कारणहरू**

**- अत्यधिक कफी सेवन**

विशेषगरी एस्प्रेसो-आधारित कफीहरूमा पाइने डिटरपेन्स नामक तत्वले नराम्रो कोलेस्टेरोल (ीमि) बढाउँछ। दिनमा दुई कपभन्दा बढी कफी सेवन गर्न नहुने सल्लाह दिइन्छ।

**- मानसिक तनाव**

तनावले शरीरमा कोर्टिसोल हर्मोन बढाउँछ, जसले लिपिड मेटाबोलिजममा असर पार्छ र कोलेस्टेरोल बढाउँछ। योग, ध्यान र पर्याप्त निद्राले तनाव नियन्त्रण गर्न सकिन्छ।

**- चुरोट र मदिरा सेवन**

चुरोटको निकोटिनले राम्रो कोलेस्टेरोल (ज्मी) घटाउँछ र नराम्रो कोलेस्टेरोल बढाउँछ। चुरोट पूर्णरूपमा बन्द गर्नु सर्वोत्तम उपाय हो।

**- केही औषधिहरूको सेवन**

जस्तैः एमियोडारोन, डानाजोल, मूत्र औषधि, एन्टिकन्भल्सेन्ट आदि। यदि यस्तो औषधि चलिरहेको छ भने चिकित्सकलाई जानकारी गराउनुपर्छ।

**- गर्भावस्था र तीव्र तौल घटाइ**

गर्भावस्थामा हर्मोनल परिवर्तनका कारण कोलेस्टेरोल स्वाभाविक रूपमा बढ्न सक्छ। तीव्र तौल घटाउँदा पनि अस्थायी रूपमा कोलेस्टेरोल बढ्न सक्छ।

**कोलेस्टेरोल नियन्त्रणका उपायहरू**

खाना खाएपछि ५ मिनेट आराम र त्यसपछि हल्का टहलिएर पाचन सुधार गर्न सकिन्छ।

खानाको बीचमा पानी नपिउने र ध्यान दिएर खाना खाने।

लसुन, प्याज, टुसा उम्रिएका अन्न र सोयाबिनजस्ता खाद्यपदार्थ सेवन गर्ने।

नियमित व्यायाम, सन्तुलित आहार र पर्याप्त निद्रालाई प्राथमिकता दिने।

**निष्कर्ष -** कोलेस्टेरोल शरीरका लागि आवश्यक भए पनि यसको अत्यधिक मात्रा स्वास्थ्यका लागि खतरा बन्न सक्छ। सन्तुलित जीवनशैली, सही आहार र मानसिक स्वास्थ्यको ख्याल राखेर कोलेस्टेरोललाई नियन्त्रण गर्न सकिन्छ। जोखिमयुक्त व्यवहारहरू त्यागेर हृदयघात, स्ट्रोक र अन्य घातक रोगहरूबाट बच्न सकिन्छ।

# च्वबहाः गल्छी बचाउन जनता सडकमा डोजरमुनि पल्टिन तयार मेयर डंगोल




कीर्तिपुर - ऐतिहासिक च्वबहाः गल्छी संरक्षणको सवालमा मंगलबार कीर्तिपुर नगरपालिका वडा नं. ६, क्वयना (जलविनायक) मा आयोजित सार्वजनिक सुनुवाइ तनावपूर्ण बन्यो। बागमती सभ्यता विकास परियोजनाका इञ्जिनियरले गल्छीको माथिल्लो भागमा सरसफाइ गर्ने र अवरोध बनेका ढुंगामात्रै हटाउने प्रस्ताव राखेपछि स्थानीयबासी आक्रोशित बने।

कार्यक्रममा वडाध्यक्ष खीरमान सिंह बस्नेतले च्वबहाः गल्छीमा काम गर्न सिफारिस गरेको पुष्टि गरेपछि जनआक्रोश झन् बढ्यो। स्थानीय समुदायले ऐतिहासिक गल्छीको स्वरूपमा कुनै पनि परिवर्तन नगर्न चेतावनी दिँदै, यदि गल्छी बिगार्ने प्रयास भयो भने "रगतको खोला बग्ने" भन्दै कठोर विरोध जनाए।

कार्यक्रममा सहभागी प्रतिनिधिसभा सदस्य तथा पूर्वमन्त्री राजेन्द्र कुमार केसीले च्वबहाः गल्छीमा केही नहुने आश्वासन दिँदै "रगतको खोला बगाउनु पर्ने अवस्था नआओस्" भन्ने अभिव्यक्ति दिएका थिए। तर, उनी बिदा हुँदै गर्दा नाराबाजी र जनआक्रोश चुलिँदा तनावपूर्ण अवस्था सिर्जना भयो।

स्थानिय बासिन्दाहरुको भनाइमा कीर्तिपुर वडा नं. ६ बाट च्वबहाः गल्छीमा काम गर्न सिफारिस गरिएको सांसद राजेन्द्र कुमार केसी र शहरी विकास मन्त्री प्रकाश मान सिंहको निर्देशनमा भएको हो। त्यसैले दोष वडाध्यक्षको मात्र नभई, राजनीतिक नेतृत्वकै भूमिका प्रश्नको घेरामा आएको छ। जनसमुदायले उक्त सिफारिसको खण्डन गर्न सांसद केसी र कीर्तिपुर नगरपालिकासँग लिखित रुपमा मागसमेत गरेका छन्।

सार्वजनिक सुनुवाइको क्रममा कीर्तिपुर नगरपालिकाका मेयर कृष्णमान डंगोलले स्पष्ट घोषणा गरे – "गल्छी फराकिलो बनाउने कुरा त टाढाको विषय हो, एउटा ढुंगा पनि हटाउन दिइने छैन। सेनाले डोजर लिएर आए भने त्यसको मुनी पल्टिने पहिलो व्यक्ति म नै हुनेछु।" मेयरको यो कडा अभिव्यक्तिले जनसमुदायको समर्थन पायो।

स्थानीयवासीले उठाएको अर्को महत्वपूर्ण मुद्दा डुवानसम्बन्धी थियो। उनीहरूले च्वबहाः गल्छीले डुवानमा कुनै भूमिका नभएको दाबी गर्दै, खोलाको मापदण्ड मिचेर अवैध संरचना बनाउनेहरू नै समस्याको जड भएको बताए। हजारौं वर्षदेखि नदीको प्राकृतिक बहावमा कुनै बाधा नबनेको गल्छी अहिले आएर कसरी बाधक भयो भन्ने प्रश्न पनि उठाइएको छ।

जनता, स्थानीय सरकार र राजनीतिक नेतृत्वबीचको यो टकराव च्वबहाः गल्छी मात्र होइन, सम्पूर्ण सांस्कृतिक सम्पदा संरक्षणका सवालमा एक महत्वपूर्ण मोड बन्न सक्ने देखिन्छ। स्थानीयको एकताबद्ध आवाजले सरकारलाई पुनः सोच्न बाध्य पार्ने देखिन्छ।

# ईंटाभट्टामा हुर्किएकी गोमा श्रेष्ठले एसईईमा ल्याइन् ४.० जीपीए, डाक्टर बन्ने लक्ष्य



भक्तपुर, । चाँगुनारायण नगरपालिका-८, सुडालस्थित जस्ताको टहरामा बस्दै आएकी गोमा श्रेष्ठले माध्यमिक शिक्षा परीक्षा (एसईई) २०८१ मा सर्वोत्कृष्ट नतिजा प्राप्त गरेकी छन्। सामुदायिक विद्यालय महेन्द्रग्राम माध्यमिक विद्यालयबाट एसईई दिएको गोमाले ४.० जीपीए प्राप्त गर्दै चाँगुनारायण नगरपालिकाकै उत्कृष्ट विद्यार्थी बन्न सफल भएकी हुन्।

धेरैका लागि सामान्य लाग्न सक्ने यो उपलब्धिको पृष्ठभूमि भने असाधारण छ। गोमा इँटाभट्टाको छेउमा अवस्थित टहरामा हुर्किएकी हुन्। बुबा आमासँगै बिहान साँझ खेत र भट्टामा काममा सघाउने उनी दिउँसो स्कुल जान्थिन्। कक्षा ९ सम्म काम र पढाइलाई सँगसँगै सम्हालेकी गोमाले कक्षा १० पुगेपछि पढाइलाई पहिलो प्राथमिकतामा राखिन्। त्यसको फलस्वरूप, उनले एसईईमा शतप्रतिशत ग्रेड ल्याएर आफू र परिवारको मेहनतलाई सार्थक बनाइन्।

उनको पारिवारिक अवस्था निकै साधारण छ। बुबा मिनबहादुर श्रेष्ठ र आमा सरस्वती श्रेष्ठ रामेछापको खनियाँपानीबाट छोरीलाई राम्रो शिक्षा दिलाउने सपना बोकेर करिब १२ वर्षअघि भक्तपुर आएका थिए। खनियाँपानीमा विद्यालयसम्म पुग्न एक घन्टा भन्दा बढीको उकालो-ओरालो पार गर्नुपर्थ्यो। त्यसैले इँटा पार्दै र भारी बोक्दै भए पनि छोरीलाई पढाउने अठोटसाथ उनीहरू भक्तपुर झरे।

गोमाको बुबाले भने, "छोरीको पढाइप्रतिको लगाव देखेर थातथलो त्यागेर भक्तपुर आएको निर्णय आज सार्थक भएको छ।" खेतबाट फर्किएर हिलो पखाल्दै गर्दा एसईईको नतिजा सार्वजनिक भएको थाहा पाउँदा गोमा निकै आत्तिएकी थिइन्। जब ४.० जीपीएको नतिजा देखिन्, खुसीले आँखा रसाएकी थिइन्। "खुसीले उफ्रिएँ, बुवा आमालाई देखाएर स्याबासी पाइँ," उनले भनिन्।

गोमाको सपना अब अझ ठूलो छ। उनी नेपालकै कुनै मेडिकल कलेजबाट एमबीबीएस पढेर डाक्टर बन्ने लक्ष्य राख्छिन्। त्यसका लागि विज्ञान संकायमा प्लस टु गर्दै छात्रवृत्तिमा मेडिकल अध्ययन गर्न चाहन्छिन्।

यसबीच, गोमाको मेहनत र लगनशीलता देखेर नेपाली काँग्रेस भक्तपुर जिल्ला सभापति तथा संघीय सांसद दुर्लभ थापाले उनलाई कक्षा ११ र १२ को पूर्ण छात्रवृत्तिका साथै पोसाक र किताबको व्यवस्था समेत गर्ने घोषणा गरेका छन्। सांसद थापाले गोमाको सफलता समाजमा प्रेरणाको स्रोत बनेको बताउँदै शिक्षा नै परिवर्तनको मूल आधार हो भन्ने कुरालाई पुष्टि गरेको उल्लेख गरे।

सानो जस्ताको टहरा, त्यहीँ पलङ, किताबको चाङ, धान गहुँका बोरासँगै हुर्केकी गोमा आज लाखौं युवाको प्रेरणा बनेकी छन्। उनीजस्तै थुप्रै किशोरीहरूका लागि गोमाको संघर्ष र सफलता एउटा उज्यालो बाटो बन्न सक्छ।

# मध्यपुरमा दुई महिने सेरामिक्स तालिम सम्पन्न




मध्यपुर थिमि । नेपाल सेरामिक्स संघको हल, सिद्धिकाली मा गत आइतबार दुई महिनासम्म सञ्चालन भएको सेरामिक्स तालिम समापन गरिएको छ । समापन समारोह असार १५ को अवसरमा आयोजित दहीच्युरा खाने कार्यक्रमसँगै सम्पन्न भएको थियो ।

बागमती प्रदेशसभा सदस्य धनेश्वरी प्रजापति प्रमुख अतिथिको रूपमा सहभागी भएको कार्यक्रममा प्रशिक्षार्थीहरूलाई प्रमाणपत्र वितरण गरिएको थियो । उनले युवाहरूले सिकेको सीपलाई व्यवहारमा उतार्न आग्रह गर्नुका साथै आगामी प्रदेश सरकारको बजेटमा सेरामिक्स भवन निर्माणका लागि १५ लाख रुपैयाँ विनियोजन गरिएको जानकारी दिए ।

उद्योग तथा वाणिज्य कार्यालय, भक्तपुरको आयोजनामा र नेपाल सेरामिक्स संघको सहआयोजनामा सम्पन्न उक्त तालिममा २५ जना युवाहरूले सहभागिता जनाएका थिए । उनीहरूले परम्परागत माटाका भाँडाकुँडा बनाउने कला र प्रविधिमा दक्षता हासिल गरेका हुन् ।

उद्योग तथा वाणिज्य कार्यालयका प्रमुख रामप्रसाद कुस्माले लोपोन्मुख परम्परागत सीप जोगाउन तालिमले पुर्याएको योगदानप्रति सराहना गर्दै प्रशिक्षक र आयोजक संस्थालाई धन्यवाद ज्ञापन गरे । प्रशिक्षण कार्य प्रशिक्षक नारायणभक्त प्रजापति र रामकृष्ण प्रजापतिले संयुक्त रुपमा सञ्चालन गरेको थियो ।

नेपाल सेरामिक्स संघका अध्यक्ष श्रीकृष्ण प्रजापति र सहकारी अध्यक्ष हरिगोविन्द प्रजापतिले पनि शुभकामना मन्तव्य व्यक्त गरेको थियो । आयोजक पक्षले यस्ता सीपमूलक कार्यक्रमलाई भविष्यमा पनि निरन्तरता दिने प्रतिबद्धता जनाएको छ ।

# एसियाडका लागि ३१ खेल दर्ता गरिएको मन्त्रालयको दाबी, एनओसीको अस्वीकार

काठमाडौं – युवा तथा खेलकुद मन्त्रालयले सन् २०२६ मा जापानमा हुने २० औं एसियाली खेलकुद (एसियाड) का लागि नेपालबाट ३१ खेल दर्ता गरिएको दाबी गरेको छ। तर, नेपाल ओलम्पिक कमिटी (एनओसी) ले ३० खेल मात्र दर्ता गरिएको जानकारी गराउँदै मन्त्रालयको दाबीलाई अस्वीकार गरेको छ।

एनओसीले आज पत्रकार सम्मेलन गर्दै एसियाडका लागि ३० खेल दर्ता गरिसकेको जानकारी दिएको केही समयमै मन्त्रालयले प्रेस विज्ञप्ति जारी गर्दै थप एक खेलसहित ३१ खेल दर्ता भएको पुष्टि गरेको हो। मन्त्रालयको दाबी अनुसार उक्त खेलहरू आयोजक समिति ओलम्पिक काउन्सिल अफ एसिया (ओसीए) सँगको विशेष अनुरोधपछि दर्ता भएका हुन् भने त्यसको पुष्टिका लागि पत्र समेत प्राप्त भएको जनाइएको छ।

मन्त्रालयले दर्ता गरेका ३१ खेलमध्ये ९ खेल एनओसीको सूचिमा उल्लेख छैनन्। ती खेलहरूमा तेक्वान्दो, जिम्न्यास्टिक, इक्वेस्ट्रियन, फुटबल, फेन्सिङ, सुटिङ, ट्रायथलन, ह्यान्डबल, र रोइङ रहेका छन्।

यसैबीच, एनओसी अध्यक्ष जीवनराम श्रेष्ठले एसियाडका लागि खेल दर्ता गर्ने अधिकार केवल एनओसीसँग मात्र भएको दाबी गर्दै मन्त्रालयको विज्ञप्ति भ्रामक भएको प्रतिक्रिया दिएका छन्। उनले मन्त्रालयले जनताको ध्यान अन्यत्र मोड्न गलत सूचना प्रवाह गरेको आरोपसमेत लगाएका छन्।

दुवै निकायबीच लामो समयदेखि चल्दै आएको अधिकारको द्वन्द्व फेरि चर्किएको देखिन्छ। मन्त्रालयले जारी गरेको विज्ञप्तिमा श्रेष्ठ नेतृत्वको एनओसीलाई 'अवैध' ठहर गर्दै ओसीएबाट कुनै आधिकारिक स्वीकृति नआएको अवस्थामा एनओसीको कार्यलाई मान्यता नदिइने स्पष्ट पारेको छ।

मन्त्रालयका अनुसार दर्ता गरिएका ३१ खेलः

एथलेटिक्स, बक्सिङ, क्रिकेट, तेक्वान्दो, कबड्डी, कराते, इ-स्पोर्ट्स, उसु, जिम्न्यास्टिक, पौडी, जुडो, टेबल टेनिस, भलिबल, साइकलिङ, इक्वेस्ट्रियन, फुटबल, फेन्सिङ, गल्फ, सुटिङ, टेनिस, ट्रायथलन, भारोत्तोलन, कुस्ती, बास्केटबल, ब्याडमिन्टन, हकी, सफ्ट टेनिस, ह्यान्डबल, स्क्वास, रग्बी, रोइङ

एनओसीमार्फत दर्ता गरिएका ३० खेलः

एथलेटिक्स, आर्चरी, ब्याडमिन्टन, बास्केटबल, बक्सिङ, ब्रेकिङ एण्ड डान्स स्पोर्ट्स, बेसबल एण्ड सफ्टबल, राफ्टिङ एण्ड कनोइङ, कुराँस, क्रिकेट, साइक्लिङ, इ-स्पोर्ट्स, गल्फ, हकी, जुडो, कबड्डी, कराते, मोडर्न पेन्टाथलन, रग्बी, स्केटिङ, स्पोर्ट्स क्लाइम्बिङ, स्क्वास, सफ्ट टेनिस, पौडी, टेनिस, टेबल टेनिस, भलिबल, भारोत्तोलन, कुस्ती, उसु

एसियाडको तयारीसँगै मन्त्रालय र एनओसीबीचको विवाद झनै चुलिएको छ। आगामी दिनमा यसले नेपाली खेलकुद क्षेत्रमा कस्तो प्रभाव पार्नेछ भन्ने प्रश्न उठ्न थालेको छ।

# म्यानचेस्टर सिटी क्लब विश्व कपबाट बाहिर




एजेन्सी - साविक विजेता म्यानचेस्टर सिटी क्लब विश्व कपको अन्तिम १६ बाट बाहिरिएको छ।

अमेरिकामा जारी क्लब विश्वकपमा आज अतिरिक्त समयमा साउदी अरबको क्लब अल-हिलालसँग ४-३ ले पराजित हुँदै सिटी चाहिएको हो।

७ गोलको रोमाञ्चक खेलमा अल हिलालले अतिरिक्त समयमा २ गोल गर्दै क्वाटरफाइनलको यात्रा तय गरेको हो ।

पेप ग्वार्डिओलाको टोली समूह चरणबाट सहजै अघि बढेको थियो। अन्तिम १६ मा कमजोर रक्षात्मक प्रदर्शनका सिटीका लागि महंगो पर्यो ।

सिटीले लगातार चौथो खेलमा पहिलो १० मिनेटमै गोलको खाता खोल्यो । कप्तान बर्नार्डो सिल्भाले विपक्षी डिफेन्डरले क्लियर गर्न नसकेपछि नजिकबाट गोल गरे । अल-हिलालले पहिलो हाफमा खासै अवसर बनाउन सकेन । तर दोस्रो हाफ सुरु भएको ४४ सेकेन्डमै ब्राजिलियन स्ट्राइकर मार्कोस लियोनार्डोले बराबरी गोल फर्काए।

बार्सिलोना पूर्व खेलाडी म्याल्कमले डिफेन्स चिर्दै ५२औं मिनेटमा अल-हिलाललाई अग्रता दिलाए। तर ५५ औं मिनेटमा एर्लिङ हालान्डले कर्नरबाट आएको बल गोल गर्दै सिटीलाई खेलमा फर्काए।

निर्धारित समय २-२ को बराबरी टुंगियो। डिफेन्डर कालिदु कुलिबालीले ९४औं मिनेटमा शक्तिशाली हेडर मार्फत गोल गर्दै अल-हिलाललाई अग्रता दिलाए। तर, परिवर्तित खेलाडी फिल फोडेनले १ सय चार मिनेटमा गोल गर्दै सिटीको सम्भावनालाई जीवित राखे। अल-हिलालका लागि नायक बने मार्कोस लियोनार्डो । अतिरिक्त समय सकिन ८ मिनेट बाँकी रहँदा उनले गरेको गोल निर्मायक बन्यो र २०२१ एएफसी च्याम्पियन्स लिग विजेता अन्तिम आठमा पुग्यो ।

अल हिलालले सेमिफाइनल प्रवेशका लागि ब्राजिलको फ्लुमिनेसको सामाना गर्नेछ । अर्को प्रि क्वाटरफाइनलमा फ्लुमिनेसले इन्टर मिलानलाई २-० ले हराएको थियो ।

## बागमतिको....

तथा व्यवस्थापन प्राधिकरणको निर्णयअनुसार चोभार गल्छीको विस्तार गरेर उपत्यका डुबान समस्या समाधान गर्ने भनिएको छ ।

गृहमन्त्री रमेश लेखकले संसद्मा भने, "चोभारको गल्छी साँघुरो हुँदा पानी प्रवाहमा बाधा पुगेर उपत्यकामा डुबान हुने गरेको निष्कर्षमा पुगिएको छ । त्यसैले गल्छी विस्तार गर्ने निर्णय गरिएको हो ।"

विज्ञ र अभियन्ताको आपत्ति

वरिष्ठ भूगर्भविद् बास्कोटाका अनुसार चोभारको गल्छी करिब करोडौँ वर्ष पुरानो चट्टानी भूभाग हो । उनले चट्टान काट्ने निर्णय नभई केवल प्रवाह अवरोध हटाउने तर्फ सरकारले लाग्ने सम्भावना देखाएका छन् । "गल्छी खोल्नुभन्दा खोलामा बहाव नअडिने अवस्था बनाउनु उपयुक्त हुन्छ," उनको सुझाव छ ।

सांस्कृतिक संरक्षण अभियन्ता गणपतिलाल श्रेष्ठले भने सरकार उल्टो बाटोमा लागेको आरोप लगाउँछन् । "खोला किनार मिचेर संरचना बनाउँछ, खेत मास्छ अनि डुबान रोक्न गल्छी फोर्छु भन्छ । यो सोचै गलत हो," उनी भन्छन् ।

उनका अनुसार मञ्जुश्री गल्छी केवल प्राकृतिक सम्पदा मात्र नभई सांस्कृतिक आस्थासँग जोडिएको ठाउँ हो । चोभार गल्छीको कुनै पनि रूपमा परिवर्तनको विरोध गर्दै उनले झोलुङ्गे पुलमा कालो ब्यानरसहित सरकारलाई खबरदारीसमेत गरेका छन् ।

प्राधिकरणको स्पष्टिकरण

सरकारको निर्णयको चर्को विरोधपछि विपद् जोखिम न्यूनीकरण तथा व्यवस्थापन प्राधिकरणले ११ असारमा स्पष्टीकरण जारी गर्‍यो । विज्ञप्तिमा भनिएको छ, "गल्छीको प्रवाहमा अवरोध हुँदा डुबान हुने भएकाले नेपाली सेनासँग समन्वय गरी अवरोध हटाउने योजना मात्र हो, चट्टान काट्ने होइन ।"

काठमाडौँ उपत्यकामा डुबान समस्या समाधानका लागि वास्तविक कारण-जसमा अव्यवस्थित सहरीकरण, घट्दो जल प्रवाह, हराउँदै गएका खेत-बारी र प्राकृतिक जल सञ्चय प्रणालीको अभाव प्रमुख हुन्-लाई बेवास्ता गर्दै चोभार गल्छीलाई दोष दिनु दीर्घकालीन समाधान होइन भन्ने विज्ञहरूको साझा चेतावनी हो । खोला-किनारको मिचिएको भूभाग फिर्ता गरी जल प्रवाह पुनःस्थापना गर्नु नै टेकेदार समाधान बन्ने आवाज चर्किँदै गएको छ ।

त्यस्तै सरकारले चोभार गल्छी क्षेत्रको पाँचवटा ठूला ढुंगा फुटाएर नदीको बहाव मार्ग फराकिलो बनाउने तयारी गरेपछि स्थानीय आदिवासी नेवार समुदायको तीव्र विरोध चुलिएको छ। विशेषगरी कीर्तिपुर नगरपालिका-६ स्थित न्हसिकाप क्षेत्र (नेवारी भाषामा च्वबहाः गल्छी) लाई लक्षित यो योजनाविरुद्ध नेवाः देय् दबू, कीर्तिपुर वडा समिति अगाडि आएको छ। समितिले आइतबार एक प्रेस विज्ञप्ति जारी गर्दै प्रस्तावित विकास योजनाले सांस्कृतिक, धार्मिक, ऐतिहासिक र प्राकृतिक सम्पदा ध्वस्त पार्ने खतरा औँल्याएको छ।

ऐतिहासिक र सांस्कृतिक सम्पदा जोगाउन आग्रह

नेवाः देय् दबू कीर्तिपुर वडा ६ का अध्यक्ष वीरेन्द्र महर्जनद्वारा हस्ताक्षरित विज्ञप्तिमा उल्लेख गरिएको छ कि च्वबहाः गल्छी कुनै साधारण नदी मार्ग होइन, यो काठमाण्डौं उपत्यकाको आदिम सभ्यता विकाससँग गहिरो रूपमा गाँसिएको सांस्कृतिक केन्द्र हो। विज्ञप्तिमा भनिएको छ, "न्हसिकाप स्वयं ऐतिहासिक, सांस्कृतिकका साथै प्राकृतिक सम्पदाको रुपमा उभिएको छ।"

नेवार समुदायको विश्वासअनुसार, यही गल्छीबाट मञ्जुश्रीले खड्ग प्रहार गरी उपत्यकाको पानी निकास गराएका थिए। त्यही क्षेत्रभित्र जल विनायक (क्वयना गणेश) मन्दिर, बासुकी नागको स्थल र चखुंति-बखुंति नामक एशियाको दोस्रो लामो गुफा समेत रहेको उल्लेख गर्दै विज्ञप्तिले यस सम्पदाको विशिष्टता उजागर गरेको छ।

"विकास"को नाममा विनाशको चेतावनी

विकासको नाममा नदीको बहाव क्षेत्रलाई साँघुरो पारेर चोभार करिडोर जस्ता संरचना बनाइएकोमा विज्ञप्तिले गम्भीर आपत्ति जनाएको छ। यस प्रकारका योजनाले विगतमा उपत्यकाका विभिन्न क्षेत्र डुबानमा पार्ने अवस्था सिर्जना गरिसकेको उदाहरण दिँदै, अब चोभार गल्छीमा फेरि यस्तै जोखिम दोहोरिन सक्ने चेतावनी दिइएको छ।

विज्ञप्तिमा भनिएको छ, "हजारौं वर्ष र शताब्दी अघिदेखि बाढी र डुबानको निमित्त गल्छी बाधक नभएको र हुन पनि नसक्ने तथ्यप्रति बेवास्ता गर्दै गल्छीमा ढुंगा फुटाउने तयारी हुनु दुःखद हो।"

आदिवासी अधिकार र अन्तर्राष्ट्रिय सन्धीको उल्लंघन

नेवाः देय् दबूले नेपालको संविधानमा उल्लेखित आदिवासी जनजातिको सांस्कृतिक अधिकार, भूमि संरक्षणको ग्यारेन्टी र नेपालले अंगीकार गरेका अन्तर ाष्ट्रिय सन्धी–जस्तै आइएलओ १६९ तथा संयुक्त राष्ट्रसंघीय आदिवासी अधिकार घोषणा (गल्न्छ्क्षए)–को उल्लंघन गर्दै गल्छीमा ढुंगा फुटाउने कार्य अघि बढाइएमा त्यो स्वीकार्य नहुने स्पष्ट पारेको छ।

विज्ञप्तिमा भनिएको छ, "पूर्व सुसूचित जानकारीसहितको मञ्जुरी बिना गरिने कुनै पनि कार्य गैरकानुनी ठहरिनेछ। यदि स्थानीय समुदायको भावना विपरीत कार्य गरिएमा त्यसबाट उत्पन्न हुने परिस्थितिको जिम्मेवारी सम्बन्धित निकाय नै हुनेछ।"

सरकारको योजनाले चोभार गल्छीको प्राकृतिक स्वरूप परिवर्तन गर्ने सम्भावना रहेकाले स्थानीय नेवार समुदाय सतर्क बनेको देखिन्छ। विज्ञप्तिले यो स्थान केवल भौगोलिक नभई सांस्कृतिक चेतनाको केन्द्र भएकाले संरक्षण अपरिहार्य रहेको जोड दिएको छ। चोभार गल्छी जस्तै ऐतिहासिक सम्पदाको संरक्षण र विकास योजनाबीच सन्तुलन कायम राख्न सक्ने नीति अबको चुनौती बन्ने देखिन्छ।

## काँक्रेबारी...

थिमिको नीलबाराही वरिपरि पहिरो नियन्त्रण र वृक्षरोपण आवश्यक रहेको, सूर्यविनायक-९ काँक्रेबारीमा निक भुजिकिक हाउजिङले २२ रोपनीभन्दा बढी वन अतिक्रमण गरेको र सूर्यविनायक-१० को भिंगाली वन हुँदै बनाइएको प्लटिङ रोडलगायतका अतिक्रमणहरूमा कारबाहीको माग गरे।

प्रमुख जिल्ला अधिकारी पाण्डेले स्थानीय वन उपभोक्ता समितिहरूले नियन्त्रण गर्न नसक्ने वन अतिक्रमणलाई लिएर ती समितिहरूलाई खारेज गर्ने तयारी रहेको जनाउँदै, सार्वजनिक जग्गा तथा वन क्षेत्र अतिक्रमणमा दोषीलाई प्रमाणसहित कानुनी कारबाही अगाडि बढाइने बताए। उनले राजनीतिक दलहरूले पनि यस्तो कार्यविरुद्ध स्पष्ट प्रतिबद्धता जनाउनुपर्ने बताए।

राप्रपाका राजु कुइँकेलले नगरकोट आसपासको अतिक्रमण नियन्त्रणका लागि निरीक्षण गर्न र निजी प्लटिङको नाममा भइरहेको सार्वजनिक जमिन कब्जा रोक्नुपर्ने धारणा राखे। माओवादी केन्द्रका राजकुमार वनले वन क्षेत्रभित्र तारबार लगाएर वन्यजन्तु संरक्षण गर्नुपर्ने बताए भने, रास्वपाका प्रल्हाद कार्कीले सल्लाहबिना आश्रम निर्माण, लामो समय साधारणसभा नगर्ने सामुदायिक वन समिति र काँक्रेबारीको अतिक्रमणकर्तालाई कारबाही गर्न माग गरे।

डिभिजन वन कार्यालय भक्तपुरकी प्रमुख सरस्वती आचार्यले काँक्रेबारी वन क्षेत्र अतिक्रमण मुद्दा अदालतमा दायर भइसकेको पुष्टि गरिन्।

बैठकमा सहभागीहरूबीच मुद्दा कहिले टुंगिने भन्ने विषयमा कानेखुसी चलिरहेको थियो। उल्लेखनीय छ, प्रमुख जिल्ला अधिकारीको नेतृत्वमा रहेको यो समिति २०७६ सालपछि पहिलोपटक बसेको हो। जिल्लावासीहरूले बैठकबाट भएका निर्णयहरू व्यवहारमा कार्यान्वयन गर्न जोड दिएका छन्, किनभने विगतमा निर्णय मात्र हुने तर त्यसको कार्यान्वयन नहुने तीतो यथार्थ उनीहरूले भोगिरहेका छन्।

## कांग्रेस....

सक्ने जोखिम पनि उनीहरूलाई चिन्ताको विषय बनेको छ।

बर्तौलाले भने, "कांग्रेस-एमालेले संविधान संशोधनको आवश्यकता महसुस गरेका छन्। तर आत्मगत परिस्थिति तयार भए पनि वस्तुगत अवस्था अनुकूल छैन।"

कांग्रेस-एमाले : समीक्षा गर्दै, कार्यान्वयन अधुरो

कांग्रेस नेताहरूका अनुसार, पार्टीले ०८१ सालमा संविधान कार्यान्वयनको समग्र समीक्षा गरिसकेको छ र ०८२ सालमा संशोधन प्रक्रिया अगाडि बढाउने तयारी भइरहेको छ। सूचना, सञ्चार तथा प्रचार विभाग प्रमुख मीन विश्वकर्माले केन्द्रीय कार्यसमिति बैठकमा यही विषय छलफलमा रहेको जानकारी दिए।

उनले भने, "संविधान संशोधनमात्र होइन, कार्यान्वयनको समीक्षा गरेर अप्ठ्यारा प्रावधानहरू सच्याउने हाम्रो अडान हो। कार्यदल गठनको तयारी पनि भइरहेको छ।"

माओवादीको आलोचनाः 'संशोधनको नाममा सरकार परिवर्तन'

प्रमुख प्रतिपक्षी दल नेकपा माओवादी केन्द्रले भने कांग्रेस-एमालेको सहमतिको उद्देश्य संविधान संशोधन नभएर सत्ता परिवर्तन मात्र रहेको आरोप लगाउँदै आएको छ। माओवादीका प्रमुख सचेतक हितराज पाण्डेले संविधान संशोधनको कुरा बहानामात्र भएको दाबी गरे।

"सरकार बदल्न अरू उपाय नभएपछि संशोधनको कुरा आएको हो," पाण्डेले भने, "आजको सरकार जनताको होइन, दलालहरूको पक्षमा काम गरिरहेको छ।"

गुपचुप सहमति, सार्वजनिक

देउवा-ओलीबीचको सात बुँदे सहमति सुरुवातमा गोप्य राखिएको थियो। पछि दुवै पार्टीले पार्टी बैठकमार्फत् सहमतिलाई अनुमोदन गरे। प्रधानमन्त्री ओलीले प्रतिनिधिसभामा असार १७ गतेको सहमति सार्वजनिक गरेपछि मात्र जनसमक्ष आएको थियो।

सात बुँदे सहमति

१- आमजनताको चाहना बमोजिम राष्ट्रिय हितको रक्षा गर्न भ्रष्टाचार नियन्त्रण गरी मुलुकमा सुशासन कायम गर्न राष्ट्रको विकास निर्माण अभियानलाई तीव्रता दिन राजनीतिक स्थिरताका लागि अन्य राजनीतिक दललाई समेत सहभागी गराई संविधानको धारा ७६ (२) अन्तर्गत राष्ट्रिय सहमतिको सरकार निर्माण गर्ने ।

२- राष्ट्रिय सहमतिको सरकारले संविधान प्रारम्भ भएपश्चात अभ्यासमा देखापरेका सबल पक्ष र दुर्बल पक्ष तथा जटिलताको समीक्षा गरी राजनीतिक स्थायित्वको लागि संविधानमा आवश्यक संशोधन र तदनुकूलको कानुन निर्माण गर्ने विषयलाई प्राथमिकता दिने।

३- अर्थतन्त्रमा विद्यमान शिथिलतालाई अन्त्य गरी विश्वसनीय व्यावसायिक वातावरण तयार गरी आर्थिक गतिविधिलाई चलायमान बनाउने आन्तरिक र बाह्य लगानीलाई प्रोत्साहन गरी मुलुकभित्र पर्याप्त र मर्यादित रोजगारी सिर्जना गर्ने ।

४- राष्ट्रिय सहमतिको सरकारको नेतृत्व सरकार गठन भएको मितिले दुई वर्षसम्म नेकपा एमालेका अध्यक्ष केपी शर्मा ओलीले र त्यसपछि २०८४ मङ्सिरमा हुने आम निर्वाचनसम्म नेपाली कांग्रेसका सभापति माननीय शेरबहादुर देउवाले सकारको नेतृत्व गर्ने ।

५- राष्ट्रिय हितको रक्षा गर्न भ्रष्टाचार नियन्त्रण गरी मुलुकमा सुशासन कायम गर्न राष्ट्रको विकास निर्माणको अभियानलाई तीव्रता दिन राष्ट्रिय सहमतिको सरकार सञ्चालनका आधार र न्यूनतम साझा कार्यक्रम तर्जुमा गरी सोही आधारमा सरकार सञ्चालन गर्ने ।

६- राष्ट्रिय सहमतिको सरकारका लागि दुई प्रमुख राजनीतिक दलको नेतृत्वदायी भूमिका र समानताको आधारमा समान हैसियतमा सरकारमा सहभागिता रहने र अन्य राजनीतिक दललाई समेत सरकारमा समावेश गर्ने ।

७- राष्ट्रिय सहमति सरकार सहमतिको सरकारको मर्म र भावना अनुरूप प्रदेश सरकारको गठन र सञ्चालन गर्ने र जनभावनाअनुरूप प्रदेश तथा स्थानीय तहमा हुने विकास निर्माणको कामलाई तीव्रता दिने ।

कांग्रेस-एमालेको गठबन्धनले ठूलो राजनीतिक प्रतिबद्धता जनाए पनि संविधान संशोधन जस्ता संवेदनशील विषयमा व्यवहारिक प्रगति गर्न नसकेको देखिन्छ। दुईतिहाइको अभाव, आन्तरिक संवादको कमजोरी र राजनीतिक वातावरणको अपुष्टताले सहमतिको कार्यान्वयन अपूर्ण रहन गएको छ। अबको चुनौती भनेको प्रतिबद्धतालाई कार्यान्वयनमा रूपान्तरण गर्ने हो।

## ३२३....

यही विस्थापनले गर्दा आफू "दुखी" भएको बताउँदै उनले आफ्नै नाममा पनि त्यो पीडा प्रतिबिम्बित गरेका छन्।

त्यस कालखण्डमा पनि राज्यले सार्वजनिक संरचना निर्माणका लागि नागरिकका घर-जग्गा अधिग्रहण गर्ने चलन रहेको देखिन्छ। दुखी भारो मात्र होइन, मन्दिर निर्माणका क्रममा तःमारी क्षेत्रबाट धेरैलाई हटाइएको थियो। विस्थापित गरिएकाहरूलाई राज्यले सत्ताभर्नाका लागि 'पलिखेल' नामक स्थानमा जग्गा दिएको थियो। नेपाल भाषामा 'पलि' भन्नाले सत्ताभर्ना र 'ख्य' भन्नाले खेत जनाउँछ। यही व्युत्पत्तिबाट पलिख्य शब्द बनेको हो, जुन कालान्तरमा अपभ्रंश हुँदै आजको 'पलिखेल' भएको हो।

पलिखेलमा बसोबास गर्न पुगेकाहरूलाई त्यसबेला 'पलिख्य' भनिन्थ्यो। पछि यही नामबाट 'पलिखे' वा 'पालिखे' थरको विकास भएको पाइन्छ। हाल पूर्वतर्फ बसाइ सरेकाहरू 'पलिखे' लेख्ने गरेका छन् भने पश्चिम गएकाहरू 'पालिखे' लेख्छन्।

हाल देखिने भव्य ङ्यातपोल मन्दिर नयाँ निर्माण गरिएको भए पनि यसअघि रहेको मन्दिर बि.सं. १७५८ साल पौष सुदी ७ गते, बृहस्पतिवारका दिन विधिपूर्वक भत्काइएको थियो। त्यसपछि पाँच दिनसम्म वास्तुपूजा गरेर मात्र नयाँ मन्दिरको निर्माण कार्य थालिएको थियो। आश्चर्यजनक रूपले, जम्मा ६ महिनाभित्र मन्दिर निर्माण सम्पन्न गरिएको थियो।

त्यो समय न त आधुनिक उपकरण थिए, न त प्रविधि। तैपनि निर्धारित अवधिमा यति विशाल मन्दिर बनाइनु तत्कालीन शासक, कर्मचारी र निर्माणकर्ता सबैको समर्पण र दृढताको प्रमाण हो। अहिलेको सन्दर्भमा हेर्दा, प्रविधि र स्रोत साधन प्रशस्त हुँदाहुँदै पनि सरकारी योजनाहरू वर्षौंदेखि अपूरा रहने गरेको अवस्था देखिन्छ।

यसै सन्दर्भमा, मन्दिर निर्माणका क्रममा तयार पारिएको मूल नक्सा अझै पनि महत्वपूर्ण दस्तावेजका रूपमा रहेको उल्लेख गर्न सकिन्छ।

## स्थानीय तह....

कानुनी व्यवस्थाको उल्लंघन

स्थानीय सरकार सञ्चालन ऐनअनुसार स्थानीय तहले स्रोत अनुमान तथा बजेट सीमा निर्धारण समिति गठन गरी चारसदस्यीय टोलीमार्फत बजेटको खाका तयार गर्नुपर्ने व्यवस्था छ। तर लेखापरीक्षण गरिएका अधिकांश स्थानीय तहले यस्तो प्रक्रिया पालना नगरेको पाइएको छ।

गत आर्थिक वर्ष ४८ वटा स्थानीय तहले तोकिएको समयभित्र वार्षिक बजेट पेस गर्न सकेनन् भने ७९ स्थानीय तहले ३ अर्ब ३० करोडभन्दा बढी रकम ऐनविपरीत रकमान्तर गरे। ऐनले पुँजीगत शीर्षकमा अधिकतम २५ प्रतिशत मात्र रकमान्तर गर्न सकिने व्यवस्था गरेको भए पनि, सो सीमाभन्दा धेरै रकमान्तर गरिएको प्रतिवेदनमा उल्लेख छ।

पारदर्शिता र जवाफदेहितामा कमी

प्रतिवेदनमा बजेट खर्चमा पारदर्शिता र जवाफदेहिताको अभाव देखिएको छ। अबण्डा रकम कार्यपालिकाको निर्णयबाट मनपरी ढंगले विभाजन गरी पटके योजना र कार्यक्रममा खर्च गरिँदा वित्तीय अनुशासन उल्लङ्घन भएको जनाइएको छ।

त्यस्तै, प्रदेशसभाले स्वीकृत नगरेको व्यवस्थाअनुसार १७१ स्थानीय तहले स्वकीय सचिव र सल्लाहकार राखेर ९ करोड १५ लाख रुपैयाँभन्दा बढी पारिश्रमिक खर्च गरेका छन्।

सरकारी सम्पत्ति फिर्ता नगर्ने प्रवृत्ति

महालेखा परीक्षकको प्रतिवेदनअनुसार, गत आर्थिक वर्ष १४ वटा स्थानीय तहका प्रमुख पदाधिकारी, सदस्य तथा कर्मचारीले कार्यालयबाट लिएको मोबाइल, ल्यापटपलगायतका सामग्री फिर्ता नगरी १ करोड १७ लाख ४१ हजार रुपैयाँ बराबरको सम्पत्ति आफैंमा राखेका छन्।

निष्कर्ष

स्थानीय तहमा देखिएको योजना निर्माण, बजेट तर्जुमा र खर्चसम्बन्धी बेथिति र लापरवाहीले समग्र स्थानीय विकासलाई प्रभाव पारेको छ। कानुनी प्रावधान र नियमनको प्रभावकारी कार्यान्वयन नहुनु, जनप्रतिनिधि र कर्मचारी संयन्त्रको मिलेमतोमा हुने मनपरी निर्णय, तथा वित्तीय अनुशासनको कमीले समस्या झन जटिल बनाउँदै लगेको देखिन्छ।

इमेलः thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# नेपाली चलचित्र “आमा”को पोस्टर हुलाक टिकटमा अंकित

काठमाडौं । नेपाली चलचित्र क्षेत्रको इतिहासमा विशेष मानिएको चलचित्र 'आमा' अब हुलाक टिकटमार्फत स्मरणीय बनाइएको छ । चलचित्र विकास बोर्डको २५औं वार्षिकोत्सवको अवसरमा आयोजित विशेष समारोहमा उक्त टिकट सार्वजनिक गरिएको हो ।

वि.सं. २०२१ साल असोजमा प्रदर्शनमा आएको 'आमा' नेपाली भाषाको पहिलो चलचित्र हो, जसको निर्देशन हिरा सिंह खत्रीले गरेका थिए । चलचित्रमा शिवशंकर खत्री र भुवन चन्दले प्रमुख भूमिका निर्वाह गरेका थिए । यही चलचित्रलाई नेपाली फिल्म उद्योगको औपचारिक सुरुवातको रूपमा लिइन्छ ।

हुलाक सेवा विभागले रु. १० अंकित मूल्यका दुईवटा टिकट प्रकाशन गरेको छ, जसमा 'आमा' चलचित्रका प्रमुख पात्र–नायक र नायिकाको तस्वीर समावेश गरिएको छ । साथै, टिकटको प्रथम दिवसीय आवरणमा विशेष कलात्मक डिजाइन प्रस्तुत गरिएको छ ।

टिकट अनावरण कार्यक्रममा अभिनेत्री भुवन चन्द, चैत्य देवी, बसुन्धरा भुसाल, सञ्चार तथा सूचना प्रविधि मन्त्री पृथ्वी सुब्बा गुरुङ, चलचित्र विकास बोर्डका अध्यक्ष दिनेश डिसी र हुलाक सेवा विभागकी महानिर्देशक मनमाया भट्टराई पंगेनीको सहभागिता थियो ।

टिकटको डिजाइन शाखा अधिकृत चन्द्रा थापाले तयार गरेकी हुन् । कार्यक्रममा बोल्दै महानिर्देशक पंगेनीले भनिन्, “यो टिकटले चलचित्र 'आमा'को ऐतिहासिक महत्त्वलाई विश्वभर पुर्‍याउने विश्वास लिएका छौं ।”

उनले थपिन्, “म आफैं पनि संगीतकर्मी हुँ, गीत लेख्छु र गाउँछु। त्यसैले यो अवसर मेरो लागि विशेष छ । हामी राष्ट्रिय विभूति र महत्वपूर्ण सम्पदालाई हुलाक टिकटमा समेट्दै आएका छौं ।” यस टिकट प्रकाशनले नेपाली चलचित्रको प्रवर्द्धनमा थप योगदान पुग्ने अपेक्षा गरिएको छ ।

# बल्छी धुर्बेले चलचित्र बनाउँदै, घोषणा गरे “गोबर गणेश”

काठमाडौं । चलचित्र 'गोबर गणेश' निर्माणको घोषणा गरिएको छ । 'गोबर गणेश'लाई कलाकार मरिचमान श्रेष्ठ (बल्छी धुर्बे)ले निर्देशन गर्नेछन् । बल्छी धुर्बे फिल्मसको प्रस्तुति रहने चलचित्र माघ १ गते रिलिज हुनेछ । चलचित्रका कलाकार र लेखकबारे केही जानकारी दिइएको छैन ।

टेलिचलचित्रबाट मरिचमानले सेतो पर्दामा उक्लिन लागेका हुन् । 'मेरी बास्सै'बाट दर्शकमाझ लोकप्रिय बनेका उनी पछि आफैं टेलिचलचित्र निर्देशनमा आएका थिए ।

उनका टेलिचलचित्र 'हल्का रमाइलो' र 'जुठे' दर्शकमाझ लोकप्रिय छन् । मरिचमान आफैं भने आफूले निर्देशन गर्ने चलचित्रमा अभिनय गर्नेछन् वा छैनन् केही खुलाएका छैनन् ।

यस मुख्य चलचित्रको अभिनेत्रीमा वर्षा सिवाकोटी छिन् । यस्तै अन्य कलाकारमा पदम तामाङ, सन्तोष बानिया, माओत्से गुरुङ रहेकाछन् भने सीतादेवी तिमल्सिना र पुजन घिमिरे (पुकु) पनि छन् । सीतादेवी हास्य कलाकार केदार घिमिरेकी श्रीमती हुन् । पुजन 'हल्का रमाइलो' सिरियलकी कलाकार हुन् । यद्यपि यसबारे निर्माणपक्षले केही बताएको छैन ।

“हामी कलाकार र प्राविधिकको नाम विस्तारै सार्वजनिक गर्दै जानेछौं। अहिलेलाई हामीले टाइटल एनाउन्स गर्दै रिलिज डेट लक मात्रै गरेका हौं,” निर्देशक मरिचमानले भने, “हाम्रो चलचित्रको कथा के हो पनि हामी आगामी दिनमा खोल्दै जाने नै छौं । तर, जनरा भने नामबाटै प्रष्ट भइसकेको छ, हामी हसाउन आउने हो । कमेडीको जगमा गोबर गणेश आउनेछ ।”

टौवा स्टुडियोको पब्लिसिटी डिजाइन रहने चलचित्रको डिजिटल पार्टनरमा ओएसआर डिजिटल रहेको छ । नेपालमा यो चलचित्रको वितरण श्री ब्याकटेस इन्टरटेनमेन्टले गर्नेछ ।

# विश्वकै पहिलो कृषि रियालिटी गेम शो सम्पन्न

काठमाडौं । विश्वकै पहिलो कृषि रियालिटी गेम शो रः रिभोलुशनरी एग्रीकल्चर वारद्वारा आयोजित असार १५, धान दिवसको अवसरमा नायक राजेश हमालको विशेष उपस्थितिमा राष्ट्रिय धान दिवस तथा दही चिउरा खाने कार्यक्रम गोदावरीको लेलेमा सम्पन्न भएको छ ।

गोदावरी नगरपालिका कृषि शाखा र मुक्तिनाथ कृषि कम्पनी लि.को सहकार्यमा आयोजित कार्यक्रममा मुक्तिनाथ कृषि कम्पनी लि.का प्रबन्ध निर्देशक भरत राज ढकाल, इसीमोडबाट डा.टाशी शेर्पा, गोदावरी नगरपालिकाका नगर प्रमुख गजेन्द्र महर्जन, प्रमुख प्रशासकीय अधिकृत मान बहादुर खड्का, वडा नं १० का अध्यक्ष शेखर न्यौपाने र कार्यपालिका सदस्य उमा महत लगायत विभिन्न संघ-संस्थाहरुबाट प्रतिनिधिहरु, पत्रकार, स्थानीय बुद्धिजीवी, समाजसेवी तथा स्थानीय नागरिकहरूको बाक्लो उपस्थिति रहेको थियो । स्थानीय स्तरबाट धिमेबाजा तथा स्थानीय संस्कृति झल्किने गीत, असारे गीत तथा नृत्य प्रदर्शन गरिएको थियो ।

कार्यक्रमबारे बोल्दै कृषि रियालिटी शो रका परिकल्पनाकार तथा निर्देशक शैलेश कँडेल क्षेत्रीले किसानलाई सेलीब्रीटी बनाउने तथा कृषिलाई सम्मानित पेसाको रूपमा स्थापित गर्ने उद्देश्यले अगाडि बढेको कृषि रियालिटी शोले प्रत्येक वर्ष असार १५ मा देशको विभिन्न स्थानमा धान दिवस मनाउने तथा मनोरञ्जन मार्फत जागरण फैलाउने उद्देश्य बोकेको जानकारी गराएका थिए ।

कार्यक्रममा बोल्दै रियालिटी शोका होस्ट तथा नायक राजेश हमालले हामीले आफ्नो पृष्ठभूमि तथा कृषिको महत्त्व बिर्सिन थालेको, युवाहरू पलायन हुन थालेको जसको फलस्वरूप देश खाद्यान्नमा परनिर्भर हुन थालेकोमा चिन्ता व्यक्त गरको थियो । रोपाइँमा, टग अफ वार खेल लगायतका विभिन्न गतिविधि भएको थियो ।

त्यसै गरि मुक्तिनाथ कृषि कम्पनीका प्रबन्ध निर्देशक भरत राज ढकालले युवाहरूलाई कृषि क्षेत्रमा संलग्न गराउन यस्तो कार्यक्रमहरू महत्त्वपूर्ण हुने तथा अब परम्परागत कृषि भन्दा माथि उठेर प्रविधिको प्रयोग गरी कृषि क्षेत्रलाई उकास्न सकिने बताएका थिए । कार्यक्रममा कम्पनीका प्राविधिक टोलीले ड्रोन मार्फत तरल मल छर्ने प्रविधि प्रदर्शन पनि गरेको थियो ।

कार्यक्रमबारे बोल्दै गोदावरी नगरपालिकाका नगरप्रमुख गजेन्द्र महर्जनले देश विकासमा टेवा पुर्‍याउन कृषि तथा पशुपन्छी विकासमा गोदावरी नगरपालिकाले विशेष पहल गर्दै गरेको तथा आगामी आर्थिक वर्षमा थप पहल गर्ने जानकारी गराए ।

गत वर्ष असार १५ कै दिन ललितपुरको खोकनामा एक विशेष कार्यक्रम गरी कृषि रियालिटी गेम शो रको आवेदन आह्वान गरिएको थियो । कार्यक्रममा देशभरिको ७७ वटै जिल्लाहरूबाट १६८२ जनाले आवेदन दिएका थिए । जसमध्ये शीर्ष १०० जनालाई व्यक्तिगत अन्तरवार्ता चरण, तालिम तथा जनसम्पर्क विस्तार जस्ता महत्त्वपूर्ण कार्यक्रमहरूमा समावेश गरिएको थियो । शीर्ष १०० बाट शीर्ष १२ किसान तथा शीर्ष १२ कृषि प्राविधिकहरूको सहभागिता रहेको कार्यक्रमको ६ वटा एपिसोडको छायाङ्कन शंखरापुर नगरपालिकाको कात्तिकेमा सम्पन्न भएको थियो । कार्यक्रम हिमालय टेलिभिजन तथा ओएसआर रियालिटीबाट भदौमा प्रसारण हुने छ ।

# ६ दशकको नेपाली चलचित्र इतिहासमा सर्वाधिक कमाइ गर्ने २५ फिल्मको सूची सार्वजनिक

काठमाडौं । नेपाली चलचित्र उद्योगले ६० वर्षे यात्रामा सयौं फिल्महरू उत्पादन गर्दै आएको छ । सन् १९६४ मा बनेको पहिलो नेपाली फिल्म 'आमा' बाट सुरु भएको यो यात्रा आजको दिनसम्म आइपुग्दा उल्लेखनीय उचाइमा पुगेको छ । यही सन्दर्भमा चलचित्र विकास बोर्डले टिकट बिक्रीका आधारमा सर्वाधिक कमाइ गर्ने २५ नेपाली फिल्महरूको सूची सार्वजनिक गरेको छ ।

बोर्डको २५औं वार्षिकोत्सवको अवसरमा सार्वजनिक गरिएको सूचीअनुसार निर्देशक सरोज पौडेलद्वारा निर्देशित फिल्म 'पूर्णबहादुरको सारङ्गी' सबैभन्दा अगाडि रहेको छ । यस फिल्मले करिब १७ लाख टिकट बिक्री गर्दै कुल ४६ करोड ८७ लाख रुपैयाँभन्दा बढी आम्दानी गर्न सफल भएको हो ।

यसपछि दोस्रो स्थानमा 'कवड्डी-४' रहेको छ, जसले २१ करोड ४० लाख रुपैयाँभन्दा बढी कमाइ गरेको छ । तेस्रो स्थानमा रहेको फिल्म '१२ गाउँ' ले १९ करोड ९२ लाख रुपैयाँ आम्दानी गर्दै राम्रो व्यापारिक सफलता हासिल गरेको छ ।

अन्य उल्लेखनीय फिल्महरूमा छक्का पञ्जा ४ (१७ करोड ५३ लाख), जारी (१७ करोड ४७ लाख), छक्का पञ्जा १ (१६ करोड १० लाख), महाजात्रा (१५ करोड ६७ लाख), छक्का पञ्जा ५ (१५ करोड २० लाख), कोहिनुर (१४ करोड ७५ लाख), र छक्का पञ्जा २ (१४ करोड ५१ लाख) रहेका छन् ।

यसैगरी, सूचीमा समावेश अन्य फिल्महरूले पनि ७ करोडभन्दा माथिको व्यापार गरेका छन् । यीमध्ये शत्रु गते, ऊनको स्वीटर, कवड्डी-२, बोक्सीको घर, माया छपक्कै, दिमाग खराब, अन्जली, परदेशी २, छक्का पञ्जा ३, प्रेमगीत-३, कवड्डी-कवड्डी-कवड्डी, पुजार सार्की, महापुरुष, कवड्डी र पशुपतिप्रसाद-२ (भष्मे डन) उल्लेखनीय छन् ।

विकास बोर्डका अनुसार, सार्वजनिक गरिएका सबै फिल्महरूको कमाइ आँकडा प्रामाणिक टिकट बिक्री अभिलेखमा आधारित छ । यद्यपि, फिल्मको सम्पूर्ण सफलता मापन गर्न केवल कमाइ नै पर्याप्त मापदण्ड होइन भन्ने कुरा पनि बोर्डले स्पष्ट पारेको छ ।

सूचीमा अग्रस्थानमा रहेका प्रायः फिल्महरू सामाजिक यथार्थमा आधारित ड्रामा रहेको पाइन्छ । पूर्णबहादुरको सारङ्गी, कवड्डी श्रृंखला, र छक्का पञ्जा जस्ता सामाजिक कथानकले दर्शकको मन जित्दै उल्लेखनीय व्यापारिक सफलता हासिल गरेको देखिन्छ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि–३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/

जि.प्र.का. भक्तपुर दर्ता नं. ६२/०६३/६४

स्थायी लेखा नं. ३०२८६५५२३



# थिमि टाइम्स साप्ताहिक

# THIMI TIMES WEEKLY



वर्ष १८ अङ्क ४३ ने.सं. ११४५ दिल्लाथ्व चतुर्दशी असार २५ गते बुधबार, २०८२ 09 July 2025, Wednesday पृष्ठ ८ मूल्य रु १०/–

## कांग्रेस बैठकमा मन्त्रीहरूको कार्यसम्पादन माथि प्रश्न– हेरफेरको सम्भावना बढ्दै




काठमाडौं । सरकार गठनको एक वर्ष पूरा भइसकेपछि नेपाली कांग्रेसभित्र सरकारको कार्यसम्पादनबारे असन्तुष्टि चुलिएको छ । कांग्रेस नेतृत्वको केन्द्रीय समिति बैठकमा सरकार र आफ्नै पार्टीबाट गएका मन्त्रीहरूको कार्यक्षमता र प्रभावकारितामाथि प्रश्न उठ्न थालेको छ । बैठकमा अधिकांश नेताहरूले सरकार जनताको अपेक्षाअनुसार चल्न नसकेको भन्दै आलोचना गरेका छन् ।

पाँच दिनसम्म जारी बैठकमा ७० भन्दा बढी केन्द्रीय सदस्यहरूले मन्तव्य राखेका थिए । उनीहरूमध्ये धेरैले सरकारको कामलाई औसतभन्दा पनि कमजोर बताएका छन् । संविधान संशोधनदेखि सुशासन, समावेशी विकास र समृद्धिका मुद्दामा सरकार चुकेको आरोप लगाइएको छ । खासगरी कांग्रेसबाट सरकारमा सहभागी १० जना मन्त्रीको कार्यसम्पादनमाथि निराशा प्रकट गरिएको छ ।

केन्द्रीय सदस्यहरूका अनुसार मन्त्रीहरूले तीन–तीन महिनामा कार्यसम्पादन प्रतिवेदन दिनुपर्ने अभ्यास नै रोकिनु सरकारको गैरजिम्मेवारीपनको प्रतीक हो । मन्त्रीहरूले अहिलेसम्म प्रतिवेदन पेस नगरेकोप्रति गम्भीर आपत्ति जनाइएको छ ।

डा. शेखर कोइरालाले सरकारको नेतृत्व, गठबन्धनको औचित्य, र संविधान संशोधनजस्ता मुद्दा अलपत्र परेको भन्दै चर्को आलोचना गरेका छन् । उनले माओवादीसँगको गठबन्धनबाट एमालेसम्मको यात्रालाई स्पष्टीकरण दिन सभापतिलाई आग्रह गरे ।

पार्टीका प्रवक्ता डा. प्रकाशशरण महतका अनुसार बैठकमा उठेका प्रश्नहरूलाई सम्बोधन गर्दै मन्त्रीहरूलाई अझ प्रभावकारी बन्न दबाब दिइनेछ । यद्यपि उनले तत्काल मन्त्री फेर्ने निचोड भने निस्किन नसकेको स्पष्ट पारे ।

कांग्रेस प्रचार विभाग प्रमुख मीन विश्वकर्माका अनुसार बजेट निर्माणलगायत विषयमा मन्त्रीहरूको आलोचना चर्को भएको छ । "मन्त्रीहरू जनताको अपेक्षाअनुसार प्रस्तुत हुन नसकेको गुनासो व्यापक छ," उनले भने, "आलोचना सुधारको लागि हो भनेर बुझ्नुपर्छ ।"

गृहमन्त्री रमेश लेखक र परराष्ट्रमन्त्री डा. आरजु राणा देउवालगायत केही मन्त्रीको कार्यसम्पादनप्रति व्यापक असन्तुष्टि देखिएको छ । भिजिट भिसा दुरुपयोग प्रकरणदेखि लिएर, विदेश नीति, सुरक्षा र प्रशासनिक व्यवस्थापनमा स्पष्ट खालको प्रभाव देखिन नसकेको

बाँकी पेज ७ मा

## किड्स कोरा भक्तपुर २०८२ : साइकलप्रेमी बालबालिकाका लागि दोस्रो संस्करण तयार




भक्तपुर । भक्तपुरका गल्लीहरू फेरि एकपटक बालबालिकाको जोश र साइकलको घण्टीले गुञ्जिने भएका छन् । साना साइकलप्रेमीहरूका लागि अत्यन्तै प्रतीक्षित कार्यक्रम 'किड्स कोरा भक्तपुर' को दोस्रो संस्करण यही असार २८ गते आयोजना हुँदैछ । साइकल कनेक्ट जेन.जी.को आयोजनामा र साइकल कनेक्ट भक्तपुरको अगुवाइमा हुने उक्त इभेन्टका लागि सबै तयारी पूरा भएको आयोजकहरूले जनाएका

बाँकी पेज ७ मा

## अफताबको विवादास्पद फैसलाविरुद्ध सर्वोच्चमा पुनरावेदनको तयारी




काठमाडौं । दुई दशक पुरानो चर्चित बम विस्फोट र हत्या प्रकरणमा उच्च अदालत जनकपुरको अस्थायी इजलासबाट सफाइ पाएका नेपाली कांग्रेसका नेता मोहम्मद अफताब आलमलगायत चार जना विरुद्ध सर्वोच्च अदालतमा पुनरावेदन दर्ता हुने भएको छ ।

सरकारी पक्षले सर्वोच्च अदालतमा पुनरावेदनको तयारी तीव्र बनाएको महान्यायाधिवक्ताको कार्यालयले जानकारी दिएको छ । "भद्रगोल तरिकाले फैसला आएको छ भन्ने आम धारणा रहेको अवस्थामा हामी सकेसम्म यही हप्ताभित्र पुनरावेदन दर्ता गर्छौं," सहन्यायाधिवक्ता तथा प्रवक्ता सूर्यराज दाहालले

बाँकी पेज ७ मा

## निलबाराही क्षेत्रको पहिरो रोकथाम : स्थानीयको उल्लेखनीय श्रमदान, तर भूमिका बिहीन कार्यपालिका




भक्तपुर । धार्मिक, सांस्कृतिक र पर्यावरणीय दृष्टिले अतिसंवेदनशील मानिने निलबाराही मन्दिर क्षेत्र पहिरोको उच्च जोखिममा परेको आठौं हप्ता पुग्दा यसको संरक्षणमा स्थानीय समुदायको सक्रियता उल्लेखनीय देखिए पनि नगरपालिका प्रशासन भने अझै निष्क्रिय र मौन देखिएको छ ।

लगातारको वर्षासँगै पहिरोको जोखिम झनै बढ्दै जाँदा स्थानीय बासिन्दाहरू, स्वयंसेवकहरू तथा धार्मिक श्रद्धालुहरूको साप्ताहिक श्रमदान अभियान भने जारी छ । ढुंगा बिछ्याउने, पानीको बहाव व्यवस्थापन गर्ने, तटबन्ध निर्माणजस्ता कार्यमा सयौंको संख्यामा सहभागी भई आएका छन् । यद्यपि, यस्तो सामूहिक प्रयासलाई आवश्यक प्राविधिक तथा संस्थागत सहयोग भने अझै अपूरो छ ।

यसैबीच, नगरपालिकाको पहलमा हालै सम्पन्न समन्वय बैठकमा काठमाडौं उपत्यका विकास प्राधिकरण, प्रमुख जिल्ला अधिकारी, सुरक्षा निकाय, सरोकार समितिका प्रतिनिधि तथा इन्जिनियरहरूको सहभागिता रहेको थियो ।

बाँकी पेज ७ मा



## भण्डारीको राजनीतिमा पुनरागमनपछि एमालेमा गुटबन्दी सतहमा



काठमाडौं । पूर्वराष्ट्रपति विद्यादेवी भण्डारीको राजनीतिमा सक्रिय पुनरागमनको घोषणा पछि नेकपा (एमाले) भित्र नेतृत्व तहमै ध्रुवीकरण सुरु भएको छ । भण्डारीको आगमनलाई लिएर नेताहरू दुई धारमा विभाजित भएको देखिन्छन् । एक पक्ष भण्डारीको स्वागतमा छ भने अर्को पक्ष शंकाको दृष्टिले हेरिरहेको छ ।

एमाले उपाध्यक्ष ईश्वर पोखरेल, उपाध्यक्ष सुरेन्द्र पाण्डे, अष्टलक्ष्मी शाक्य, युवराज ज्ञवालीलगायत नेताहरू भण्डारी निकट देखिएका छन् । पार्टी महासचिव शंकर पोखरेल भने पूर्वराष्ट्रपतिको सक्रिय राजनीतिमा पुनरागमनलाई अस्वाभाविक ठहर गर्दै आएका छन् । उनले सचिवालय बैठकमै पार्टी विधानबाटै पूर्वराष्ट्रपतिलाई राजनीतिमा फर्किन नदिने व्यवस्था गर्नुपर्ने प्रस्ताव समेत राखेका थिए । यद्यपि, सो प्रस्ताव अगाडि बढ्न सकेन ।

पार्टी सचिव रघुवीर महासेठले भने भण्डारीको पुनरागमन अध्यक्ष केपी शर्मा ओलीकै सहमतिमा हुने स्पष्ट पारेका छन् । उनले जनकपुरधाममा आयोजित कार्यक्रममा भने, "भण्डारी एमालेमा आउनुहुन्छ भने त्यो अध्यक्षकै प्रस्ताव र अनुमतिमा हुनेछ । संविधान वा पार्टी विधानले उहाँलाई रोक्दैन ।"

एमालेभित्र गुटबन्दीको संकेत १४ असारअघि सम्पन्न जिल्ला अधिवेशनहरूबाटै देखिएको थियो । मोरङमा त भण्डारी पक्षले स्पष्ट विजय हासिल गरेको बुझिएको छ । सोही दिनको काठमाडौंको कार्यक्रममा ओली र भण्डारी समर्थक नेताहरू फरक समूहमा देखिनु पनि उल्लेखनीय थियो ।

पार्टीमा १९ जना पदाधिकारीमध्ये ९ जना भण्डारीतिर झुकेको भनिएको छ । ओली पक्षमा खुलेर उभिएका ७ जना नेताहरू छन् । बाँकीहरू तटस्थ देखिए पनि भित्री रूपमा ध्रुवीकरण भइरहेको बताइएको छ ।

पूर्वराष्ट्रपति भण्डारीका लागि एमालेमा पुनः सक्रिय हुनु सहज

दिवंगत नेता मदन

बाँकी पेज ७ मा

# नि:शुल्क उपचार सेवा दिँदै आयुर्वेद स्वास्थ्य केन्द्र, भक्तपुर



भक्तपुर । स्वास्थ्य सेवा दिन प्रतिदिन महँगिदै गएको वर्तमान अवस्थामा भक्तपुर स्थित जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्रले नि:शुल्क रुपमा गुणस्तरीय उपचार सेवा दिँदै आएको छ। नेपाल सरकारले स्थापना गरेको यो केन्द्रबाट दैनिक रूपमा बढ्दो संख्यामा सर्वसाधारणले सेवा लिइरहेका छन्।

एकातिर निजी अस्पतालहरूले आधुनिक सेवाको नाममा महँगो शुल्क लिइरहेका बेला सरकारी अस्पतालहरूमा सेवाग्राहीको अत्यधिक चापले गुणस्तरीय सेवा नपाइने गुनासोहरू बढ्दो छन्। अर्कोतर्फ नेपालमा औषधि उत्पादन कम र आयातमा निर्भरता बढी भएकाले समेत उपचार सेवा महँगिएको जनाइएको छ। हाम्रो आफ्नै देशमा औषधी लगायतको उत्पादन नहुने कारणबाट पनि नेपालकिो लागि स्वास्थ्य सेवा महँगो हुने गरेको बताइन्छ ।

तर हाल आयुर्वेदका नाममा हुने गरेका गैरजिम्मेवार मुलक क्रियाकलापहरु र विना प्रमाणित निर्माण भएका आयुर्वेदका औषधीको सेवनका कारण हुने गरेका स्वास्थ्य समस्या आउने गरेको भ्रम सिर्जना गर्दै मानिसमा आयुर्वेद विरुद्ध भ्रामक तथ्यहरु बहिर आइरहेको कारण देशकै मौलिक र सदियौं पुरानो प्रमाणिक आयुर्वेद चिकित्सा प्रणालीलाई आम जनमानसमा सकारात्मक र सही सूचना प्रवाहित गरी आम जनतामा आयुर्वद चिकित्सा प्रणाली प्रति विश्वास जगाउन र जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्र, भक्तपुरले सेवा सुरु गरेको तीन वर्षभित्र उल्लेखनीय प्रगति गरेको विषयमा बिहीबार केन्द्र परिसरमा आयोजित पत्रकार सम्मेलनमा केन्द्रले आफ्नो तिन वर्षे कार्य प्रगति सार्वजनिक गर्दै सञ्चारकर्मीहरूसँग संवाद कार्यक्रम सम्पन्न गर्‍यो।

कार्यक्रममा केन्द्रका प्रमुख डा. नदन कँडेलले आयुर्वेद चिकित्सा पद्धति स्वास्थ्यका लागि सुरक्षित, प्राकृतिक र साइड इफेक्ट रहित भएकाले जनताको आकर्षण बढ्दै गएको जानकारी दिए। उनका अनुसार, "केन्द्रमा उपचार गर्न आउने बिरामीको संख्या हरेक वर्ष बढ्दो क्रममा छ, जसमा सञ्चार माध्यमबाट प्रवाहित सकारात्मक सूचनाले पनि ठूलो भूमिका खेलेको छ।"

उनले जानकारी दिएअनुसार, केन्द्रमा दर्ता शुल्कदेखि उपचार, परीक्षण तथा झण्डै २३ प्रकारका आयुर्वेद औषधिसमेत नि:शुल्क रूपमा उपलब्ध गराइन्छ। साथै, सस्तो दरमा औषधि उपलब्ध गराउने उद्देश्यले सञ्चालित औषधि विक्री केन्द्रमार्फत १० प्रतिशत छुटमा औषधि वितरण गरिंदै आएको छ।

डा. कँडेलका अनुसार, "यद्यपि आयुर्वेद औषधि अन्य केमिकलयुक्त औषधिको तुलनामा केही महँगो पर्न सक्छ, तर दीर्घकालीन रुपमा हेर्दा सुरक्षित, प्राकृतिक र जीवनशैलीमैत्री उपचार प्रणाली भएकाले यसको माग बढ्दै गएको छ।"

केन्द्रको मुख्य कार्यालय भक्तपुरको कमलविनायकमा रहेको छ। हाल भक्तपुर जिल्लाका चारवटै पालिकासँग समन्वय गर्दै आयुर्वेद सेवा विस्तार गरिंदै आएको छ भने आगामी दिनमा केन्द्रलाई १६ शैयाको अस्पतालमा स्तरोन्नति गर्ने लक्ष्य पनि राखिएको जानकारी दिइएको छ ।

# नगरकोट भ्रमण वर्षको अवसरमा चाँगुनारायण मन्दिर परिसरमा चित्रकला कार्यशाला सम्पन्न



भक्तपुर। नगरकोट भ्रमण वर्ष २०८२ को अवसरमा चाँगुनारायण नगरपालिका अन्तर्गतको ऐतिहासिक तथा धार्मिक सम्पदा चाँगुनारायण मन्दिर परिसरमा चित्रकला कार्यशालाको आयोजना गरिएको छ । चाँगुनारायण नगरपालिकाको भ्रमण वर्ष–२०८२ सचिवालयको आयोजनामा सम्पन्न उक्त कार्यशालाको उद्घाटन नगर प्रमुख जीवन खत्रीले क्यानभास र रंग कलाकारलाई हस्तान्तरण गर्दै गरेको थियो ।

नेपालकै प्राचीन मन्दिरमध्ये एक चाँगुनारायण मन्दिरको सांस्कृतिक, ऐतिहासिक र धार्मिक महत्वलाई विश्वमाझ फैलाउने उद्देश्यले नगरपालिकाले भ्रमण वर्ष घोषणा गरेको नगरप्रमुख खत्रीले जानकारी दिए । उनले चाँगुनारायणको कला, संस्कृति, सम्पदा र पर्यटकीय सम्भावनालाई उजागर गर्दै नगरलाई समृद्ध र व्यवस्थित बनाउने अभियानमा यो कार्यक्रम कोशेढुंगा सावित हुने धारणा व्यक्त गरे ।

नगर प्रमुख खत्रीले समाजमा सकारात्मक परिवर्तन ल्याउने र स्थानीयवासीको अनुहारमा खुसी छर्ने कार्यमा कला र साहित्यको प्रभावकारी प्रयोग गरिनुपर्नेमा जोड दिए । "आज हामी क्यानभासमा साहित्य र कलाको संगम गरिरहेका छौं," उनले भने, "यसबाट चाँगुनारायणको सम्पदा मात्र होइन, भविष्यको पहिचान समेत निर्माण हुँदैछ ।"



कार्यक्रममा प्रमुख प्रशासकीय अधिकृत मोहनकुमार श्रेष्ठले कार्यशालाबाट तयार गरिएका चित्रहरूले चाँगुनारायणको पहिचानलाई अन्तर्राष्ट्रिय स्तरमा पुर्‍याउने विश्वास व्यक्त गरे । उनले नगरकोट भ्रमण वर्षको माध्यमबाट ओझेलमा परेका सम्पदाहरू समेत उजागर हुने अपेक्षा व्यक्त गरे ।

सचिवालयका सदस्य सचिव तथा पर्यटन शाखा प्रमुख गोविन्द कट्टेलले कार्यशालामा २३ जना कलाकार सहभागी रहेको जानकारी दिए । ती कलाकारहरूले चाँगुनारायण नगरपालिकाभित्र रहेका प्रमुख धार्मिक, ऐतिहासिक तथा पर्यटकीय स्थलहरूलाई चित्रमार्फत प्रस्तुत गरेका छन् । ती चित्रहरूलाई नगरपालिकाले संग्रहालयको रुपमा संरक्षित गर्दै प्रदर्शनीको समेत व्यवस्था गर्ने योजना रहेको उनले बताए ।

कार्यशालामा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय ख्यातिप्राप्त कलाकारहरूको उपस्थिति रहनुका साथै चाँगुनारायण क्षेत्रका २३ वटा प्रसिद्ध सम्पदालाई क्यानभासमा सजीव ढंगले उतारिएको थियो ।

नगरकोट भ्रमण वर्ष अन्तर्गत यस्ता सिर्जनात्मक कार्यक्रमहरूले चाँगुनारायणको ऐतिहासिक, सांस्कृतिक र पर्यटकीय महत्वलाई अझ उजागर गर्दै पर्यटक आकर्षणमा महत्वपूर्ण भूमिका खेल्ने विश्वास गरिएको छ ।

# एसइइ उत्तीर्ण विद्यार्थी र नवोदित गायिकाको सम्मान




भक्तपुर । विनायक शिक्षा निकेतन इङ्लिस स्कुल, भक्तपुरले एसइइ उत्तीर्ण विद्यार्थीहरू तथा नवोदित गायिका इन्द्रकला राईको सम्मानमा एक विशेष बधाई तथा शुभकामना कार्यक्रम सम्पन्न गरेको छ । असार २२ गते सम्पन्न उक्त कार्यक्रम विद्यालय व्यवस्थापन समितिका अध्यक्ष गणेशराम लाछीको सभापतित्वमा तथा वडा नं. ५ र ६ का वडाध्यक्षहरूको विशेष आतिथ्यतामा सम्पन्न गरिएको थियो ।

कार्यक्रममा शैक्षिक सत्र २०८१ मा एसइइ परीक्षामा उत्कृष्ट नतिजा प्राप्त गर्ने छात्रछात्रालाई 'तुई काजी तुइल माया पुरस्कार' अन्तर्गत जनही पाँच हजार रुपैयाँ नगद, प्रमाणपत्र र मायाको चिनो प्रदान गरी सम्मान गरिएको थियो । साथै, विद्यालयमै अध्ययन गरी सांगीतिक क्षेत्रमा आफूलाई स्थापित गर्न सफल नवोदित गायिका इन्द्रकला राईलाई नगद दश हजारसहित विशेष सम्मान प्रदान गरिएको थियो ।

कार्यक्रमका प्रमुख वक्ताहरूमा मध्यपुर थिमि नगरपालिकाको शिक्षा शाखाकी धनागिरी, ब्रिटिस कलेज युकेका प्रतिनिधि प्रिन्स न्यौपाने, अभिभावक अतिथि सुपर बस्नेतलगायतले शिक्षामा नवीनतम प्रविधिको प्रयोग र समग्र व्यक्तित्व विकासमा विद्यालयको योगदानको प्रशंसा गरे । उनीहरूले प्लस टु तहमै राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरको गुणस्तरीय शिक्षा प्रदान गर्दै आएको विद्यालयप्रति बधाई ज्ञापन गरे ।

कार्यक्रमको स्वागत मन्तव्य सहायक प्रिन्सिपल प्रेमप्रसाद निरौलाले राखेका थिए भने सञ्चालन शैक्षिक संयोजक शैलेन्द्र कुमार भट्टराईले गरेका थिए ।

विद्यालयका संस्थापक प्रिन्सिपल सुरेन्द्रविक्रम प्रजापतिले आफ्ना विद्यार्थीको भविष्य उज्ज्वल बनाउन अभिभावकले धेरै टाढा नगई आफैंले विश्वास गर्न सक्ने स्थानमा पढाउने सुझाव दिँदै स्थानिय स्तरमै गुणस्तरीय प्लस टु शिक्षा पाउन सकिने विश्वास व्यक्त गरे । साथै, गायिका राईलाई सांगीतिक सफलताको शुभकामना दिँदै विद्यालयको गौरवका रूपमा चित्रण गरे ।

कार्यक्रमको अन्त्यमा गायिका इन्द्रकला राईले आफ्ना लोकप्रिय गीतमार्फत साङ्गीतिक प्रस्तुति दिँदा वातावरण झन् भावनात्मक र उत्साहजनक बनेको थियो ।

# भक्तपुर नपाको १८ औं नगरसभा सम्पन्न,

भक्तपुर । भक्तपुर नगरपालिकाको १८ औं नगरसभा सोमवार सम्पन्न भएको छ । गत असार ६ गतेदेखि सुरु भएको नगरसभा विभिन्न महत्वपूर्ण प्रस्ताव पारित गर्दै औपचारिक रुपमा समापन भएको हो ।

नगरपालिकाका अनुसार सभाको अन्तिम दिन लेखा समितिको प्रतिवेदन-२०८२, न्यायिक समितिको प्रतिवेदन, नगर कर्मचारीहरूको तलबसम्बन्धी प्रतिवेदन र वार्षिक खरिद योजनालगायतका विषयहरूमा निर्णय लिइयो ।

सभाको समापन समारोहमा सभाअध्यक्ष एवम् नगरप्रमुख सुनिल प्रजापतिले नगरसभामा सहभागिता जनाउने अतिथि, बुद्धिजीवी, सञ्चारकर्मी, कर्मचारी, नगरबासी र सभासद्हरूप्रति आभार प्रकट गरे ।

सभाको विशेष समयमा नगर सभासद्हरुले विविध स्थानीय सरोकारका विषयमा धारणा राखे । नगर सभासद् विष्णुकेशरी दुवाल, रामसुन्दर बासी, गंगालक्ष्मी बमनू, मन्जुमैंया लाखा, हेरा ख्याजु, कृष्णनारायण दुमरु र सिद्धिराम अवालले खानेपानी, सडक, पुरातात्विक सम्पदाको संरक्षण तथा अरनिको सभाभवनको निर्माण शीघ्र सम्पन्न गर्न आग्रह गरे ।

त्यस्तै नगर सभासद् इन्द्रबहादुर प्याठले सहकारी संस्थालाई सचेत गराउने र वडा नं. ९ मा रहेको पर्यटन सूचना केन्द्र पुन: सञ्चालन गर्नुपर्ने सुझाव दिए । नगर सभासद् श्यामसुन्दर मातांले नगर प्रहरीको प्रभावकारी परिचालन र सहकारीको खराब ऋण व्यवस्थापन तथा ढुंगेधाराका बन्द निकास खोल्नुपर्नेमा जोड दिए ।

त्यस्तै, नगरसभासद् नारायणप्रसाद त्वानाबासुले गाजाको नरसंहार, निजामति सेवा विधेयकमा उल्लेखित 'कुलिङ अफ पिरियड', चोभार गल्छी र रासायनिक मल व्यवस्थापनबारे धारणा राखे । गोविन्द दुवालले भ्रष्टाचारविरुद्धको आन्दोलनको चर्चा गर्दै पर्याप्त रासायनिक मल सुनिश्चित गर्न आग्रह गरे ।

सभाको अन्त्यतिर वडा नं. ९ का वडाध्यक्ष रबिन्द्र ज्याख्वले नगरसभाको संक्षिप्त प्रतिवेदन प्रस्तुत गरेको थियो ।

# चाँगुमा अग्रवर्ती खोज तथा उद्धार प्रशिक्षण सम्पन्न

भक्तपुर । चाँगुनारायण नगरपालिकाको पहलमा सशस्त्र प्रहरी बल नेपाल नं. २२ गण हे.क्वा गुह्येश्वरी, भक्तपुरको समन्वयमा “विपद् व्यवस्थापन स्वयंसेवक (अग्रवर्ती खोज तथा उद्धार)“ विषयक पाँचदिने विशेष प्रशिक्षण कार्यक्रम सम्पन्न भएको छ ।

दुवाकोटस्थित सशस्त्र प्रहरी गणमा असार २ गतेदेखि सञ्चालन भएको प्रशिक्षणमा १० महिला र २२ पुरुष गरी जम्मा ३२ जना स्वयंसेवक सहभागी भएका थिए ।

प्रशिक्षण समापन कार्यक्रममा चाँगुनारायण नगरपालिकाका उपप्रमुख रमेश बुढाथोकीले सहभागीहरूलाई प्रमाणपत्र वितरण गर्दै विपद् व्यवस्थापनमा सक्रिय भूमिका निर्वाह गर्न सफल सहभागीहरूलाई बधाई दिए । उनले विपद् पूर्वतयारी र प्रतिकार्यमा नगरपालिकाको तर्फबाट निरन्तर सहकार्य रहने प्रतिबद्धता व्यक्त गरे ।

विपद् व्यवस्थापनमा संस्थागत संरचना

उपप्रमुख बुढाथोकीले चाँगुनारायण नगरपालिकाले विपद् व्यवस्थापनसम्बन्धी आवश्यक कानुनी र नीतिगत व्यवस्था गरिसकेको जानकारी दिँदै, विपद् व्यवस्थापन इकाई गठन गरी नगर प्रहरीसमेतको समावेशमा तयारी अवस्था कायम गरिएको जानकारी दिए ।

२०८१ सालको मनसुनमा विपद्का कारण प्रभावित स्थानहरूमा नगरको विपद् व्यवस्थापन टोलीले तुरुन्त प्रतिकार्य गरेको उल्लेख गर्दै उनले सशस्त्र प्रहरी बल, नेपाल प्रहरी र नेपाली सेनासँगको सहकार्यप्रति आभार व्यक्त गरे ।

उनले स्वयंसेवकहरूको बीमा गरिने तथा प्रतिकार्यमा खटिँदा प्रदेश सरकारले तयार पारेको स्वयंसेवक परिचालन निर्देशिका अनुसार न्यूनतम सुविधा उपलब्ध गराइने स्पष्ट पारे । आगामी बजेटमा विपद् व्यवस्थापनलाई प्राथमिकता दिइने र नगरलाई विपद्-उत्थानशील नगरपालिका बनाइने योजनाबारे पनि जानकारी दिए ।

स्थानीय नेतृत्वको प्रतिबद्धता

नगरपालिका वन, वातावरण तथा विपद् व्यवस्थापन समितिका संयोजक एवं वडा नं. २ का वडा अध्यक्ष सोमप्रसाद प्रधानले अघिल्लो वर्षदेखि विपद् व्यवस्थापन स्वयंसेवक टोली गठनको थालनी गरिएको जानकारी दिदै उनले सरकारी तथा गैरसरकारी निकाय, सुरक्षाकर्मी, राजनीतिक दल, जनप्रतिनिधि र नागरिक समाजबीचको समन्वयमा पूर्वतयारी तथा प्रतिकार्यका कार्यहरू सञ्चालन भइरहेको जानकारी दिए ।

सशस्त्र प्रहरी बल गण दुवाकोटका गणपति जनक सापकोटाले विपद् व्यवस्थापन तीनै तहका सरकारहरूको साझा जिम्मेवारी भएको उल्लेख गर्दै, स्थानीय तह र सुरक्षा निकायबीचको सहकार्यले सम्भावित विपद्को जोखिम न्यूनीकरण गर्न सकिने धारणा व्यक्त गरे । नगरपालिकासँगको समन्वयलाई निरन्तरतापूर्वक अघि बढाउने विश्वास व्यक्त गर्दै, प्रशिक्षणको जिम्मेवारी प्रदान गरेकोमा नगरपालिकाप्रति कृतज्ञता प्रकट गरे ।

कार्यक्रममा नगर उपप्रमुख बुढाथोकीले सशस्त्र प्रहरी बल परिवारलाई कदरपत्र प्रदान गरेको थियो भने गणपति सापकोटाले पनि उपप्रमुखलाई मायाको चिनो प्रदान गरेको थियो ।

प्रशिक्षणमा विपद् र यसको प्रकार, कानुनी तथा नीतिगत व्यवस्था, प्राथमिक उपचार, कृत्रिम श्वास-प्रश्वास, घाइतेको वर्गीकरण, रक्तश्राव नियन्त्रण, विष तथा पोलाइ, डोरी तथा खोज उद्धार प्रविधि, भग्नावशेष व्यवस्थापन, आगलागी नियन्त्रण, गाडीबाट घाइते निकाल्ने उपायजस्ता व्यवहारिक विषयमा प्रशिक्षण प्रदान गरिएको थियो ।

कार्यक्रमको संयोजन सशस्त्र प्रहरी बलका प्रहरी नायव उपरीक्षक बुद्धिनारायण महर्जनले गरेको थियो । कार्यक्रममा चाँगुनारायण नगरपालिका विपद् व्यवस्थापन इकाई प्रमुख दिनेश थापा सहित प्रशिक्षकहरूको पनि उपस्थिति रहेको थियो ।

# नर्या कर विधेयकले मच्चायो अमेरिका भित्रै विवाद

एजेन्सी । अमेरिकाका पूर्वराष्ट्रपति डोनाल्ड ट्रम्पले शुक्रबार आफ्ना कार्यकालको सबैभन्दा विवादास्पद मानिएको नयाँ कर तथा खर्च सम्बन्धी विधेयकमा हस्ताक्षर गरे। यस विधेयकले धनी वर्गलाई कर छुट दिने, रक्षा खर्चमा वृद्धि गर्ने र आप्रवासी नियन्त्रण अभियानका लागि ठूलो बजेट विनियोजन गर्ने व्यवस्था गरेको छ। ट्रम्पले यस विधेयकलाई ‘वन बिग ब्यूटीफुल बिल’ अर्थात् ‘एउटा ठूलो, सुन्दर विधेयक’ भन्दै वर्णन गरेका छन्।

विधेयकमा हस्ताक्षरपछि स्वतन्त्रता दिवसको अवसर पारेर वाशिङटन डीसी स्थित ह्वाइट हाउसमा आयोजना गरिएको भव्य समारोहमा अमेरिकी वायुसेनाका अत्याधुनिक द्य-२ स्टिल्थ बमवर्षक र ॅ-२२ फाइटर जेटहरूले फ्लाई-पास्ट प्रदर्शन गरे। राष्ट्रपति ट्रम्पले ती विमानलाई देखेपछि सलामी दिएका थिए। यस प्रदर्शनलाई शक्ति प्रदर्शनको रूपमा हेरिएको छ।

‘अमेरिका जित्दैछ’

विधेयक पारित भएपछि ट्रम्पले भने, “अमेरिका आज जित्दैछ, पटक-पटक जित्दैछ, यति ठूलो जित पहिले कहिल्यै देखिएको थिएन।” उक्त अवसरमा रिपब्लिकन पार्टीका थुप्रै सांसदहरू पनि उपस्थित थिए। उनीहरूले विधेयक पारित गराउन महत्वपूर्ण भूमिका खेलेका थिए।

तर डेमोक्र्याट पार्टीले भने यो विधेयकले गरीबवर्गमाथि अन्याय गरेको आरोप लगाएको छ। उनका अनुसार, स्वास्थ्य बीमा, खाद्यान्न सहायता र सामाजिक सुरक्षामा ठूला कटौतीहरू गरिएका छन्। ट्रम्पले त्यसको जवाफमा भने, “तपाईंले यसको असर महसुस पनि गर्नुहुन्न।”

गरीबका लागि हेल्थ बीमामा कटौती

विधेयकले अमेरिकाका न्यून आय भएका नागरिकहरूका लागि चलाइएको ‘मेडिकेड’ स्वास्थ्य कार्यक्रममा ऐतिहासिक कटौती गरेको छ। साथै, खाद्यान्न सहायता कार्यक्रमहरू पनि घटाइएको छ। अनुमानअनुसार १.७ करोड नागरिकले आफ्नो स्वास्थ्य बीमा गुमाउने खतरा छ भने थुप्रै ग्रामीण अस्पतालहरू बन्द हुने अवस्थामा पुगेका छन्।

एलन मस्कको आलोचना

यो विधेयकको विरोधमा ट्रम्पका पूर्वसमर्थक र विश्वप्रसिद्ध उद्योगपति एलन मस्क पनि खुलेर उत्रिएका छन्। उनले यस दिनलाई ‘हाम्रो लागि डरलाग्दो दिन’ भन्दै सामाजिक सञ्जालमा आलोचना गरेका छन्। साथै, उनले नयाँ राजनीतिक पार्टी ‘अमेरिका पार्टी’ गठन गर्ने घोषणा गर्दै यस पार्टीले रिपब्लिकनहरूलाई चुनौती दिने बताए।

२०२६ का चुनावतर्फ संकेत

यो विधेयक पारित गर्न रिपब्लिकन पार्टीभित्र निकै संघर्ष भएको थियो। अन्ततः २१८-२१४ मतको झिनो अन्तरले विधेयक पारित भएको हो। ट्रम्पले हाउस स्पिकर माइक जॉनसनलाई धन्यवाद दिँदै भने, “अद्भुत काम गर्नुभयो।” विपक्षी डेमोक्र्याटहरूले भने यो विधेयक २०२६ मा हुने मिडटर्म चुनावमा जनताको रोषको कारण बन्ने विश्वास व्यक्त गरेका छन्। उनीहरू भन्छन्, “यो कानुनले गरीबबाट पैसा लिएर धनीलाई दिएको छ।”



# गाजामा राहत वितरणमै गोली : इजरायली व्यवहारको क्रुरताप्रति गम्भीर प्रश्नचिन्ह

एजेन्सी । गाजा क्षेत्र फेरि एकपटक विश्वसामु मानवताविरोधी व्यवहारको उदाहरण बनेको छ। बीबीसीसहितका अन्तर्राष्ट्रिय संचारमाध्यमले सार्वजनिक गरेको विवरण अनुसार, राहतका लागि लाम लागिरहेका भोका र थकित प्यालेस्टाइनीहरूमाथि इजरायली पक्षबाट अमेरिकाको आडमा गोली चलाउने कार्य भएको छ, जसमा पूर्व इजरायली सुरक्षा निकायसँग आबद्ध व्यक्तिहरूको प्रत्यक्ष संलग्नता रहेको गम्भीर आरोप लगाइएको छ ।

यो घटना कुनै युद्धमैदानको होइन, मानवीय राहत वितरणस्थलको हो - जहाँ शान्तिपूर्वक खाना लिन पुगेका नागरिकहरूमाथि गोली चलाइएको हो । पूर्व सुरक्षाकर्मीहरूका अनुसार, राहत लिन जाँदै गरेका मानिसहरू विस्तारै हिँडेको भन्दै उनीहरूमाथि गोली चलाइएको हो । यो दाबी आफैँमा अमानवीयता र निन्दनीय चरित्रको गम्भीर प्रतीक हो ।

इजरायली संस्था ‘गाजा ह्युमनिटेरियन फाउन्डेसन’ (न्ँ) ले उक्त आरोप अस्वीकार गर्दै घटनालाई सामान्यीकरण गर्न खोजे पनि अन्तर्राष्ट्रिय निकायहरूका तथ्यांकले त्यहाँको अवस्था भयावह रहेको उजागर गर्छ । राष्ट्रसङ्घ तथा त्यस क्षेत्रका चिकित्सकहरूको अनुसार, जिएचएफले राहत वितरण थालेपछि करिब ४ सय प्यालेस्टाइनी नागरिक मारिएका छन् - ती सबै मानवीय सहायताको खोजीमा निस्किएका व्यक्ति थिए ।

यो घटना कुनै एक दिनको दुर्घटना होइन, इजरायली नाकाबन्दी र दमनकारी नीतिको निरन्तरता हो । इजरायलले गाजामा ११ साता राहत अवरुद्ध गरिरहँदा सयौं नागरिक भोकै, औषधिविहीन र सुरक्षित आश्रयबिनाको जीवन बिताउन बाध्य भएका थिए । जब राहत वितरण सुरु भयो, तब पनि शान्तिपूर्ण नागरिकहरूलाई लक्षित गरी गोली हानिनु अन्तर्राष्ट्रिय मानवीय कानुनको स्पष्ट उल्लंघन हो । इजरायलको तेल अभिभमाथि इरानको आक्रमणका क्रममा मानव अधिकारको गम्भीर उल्लंघन र युद्ध अपराध भएको देख्ने न्यतान्याहु प्रशासन आफैले प्यालेस्ताइनमा गरेको क्रुरताको बारेमा मौन रहनु र पश्चिमा राष्ट्रहरु इजरायलको निन्दनीय कार्यमा पनि मौन बस्नुबाट मानवताको लागि इजरायल भविष्यमा खतरनाक साबित हुनेछ । यो पश्चिमा राष्ट्रकै लागि पनि भोलीका दिनमा विश्व राजनीतिमा इजरायलको दबदबामा रहनु पर्ने स्थितिको सिर्जना हुनेछ ।

मानवअधिकारको गम्भीर उल्लंघन

सन् १९४९ को जेनेभा सन्धिले युद्धपीडित जनतामाथिको सुरक्षालाई आधारभूत मानव अधिकारको रूपमा सुनिश्चित गरेको छ । तर गाजामा भइरहेको व्यवहार - चाहे राहत अवरुद्ध गर्ने नीति होस् वा राहत लिन गएका नागरिकहरूलाई गोली हान्ने कार्य - दुवै मानवीय मर्यादाको घोर उल्लंघन हुन् ।

अझ चिन्ताजनक पक्ष यो हो कि यस घटनामा अमेरिकासमेत अप्रत्यक्षरूपमा संलग्न रहेको देखिएको छ । यदि अमेरिकी संस्थाबाट राहत वितरण गरिँदै थियो भने, तिनका सुरक्षा संयन्त्रहरूले यस्ता क्रियाकलाप गर्न दिनु हुन्नथ्यो । यस्ता घटनाले अमेरिकी भूमिका र नियतप्रति पनि गम्भीर प्रश्न उठाउँछ ।

गाजामा राहत वितरणमै नागरिकलाई गोली हानिनु केवल युद्ध रणनीति नभई सोझै नरसंहारतर्फ उन्मुख प्रवृत्ति हो । यसले इजरायलको सुरक्षा सोच, प्यालेस्टाइनीहरूलाई हेर्ने दृष्टिकोण, र अन्तर्राष्ट्रिय समुदायको मौनतालाई पुनः प्रश्नको घेरामा ल्याएको छ ।

प्यालेस्टाइनी जनतालाई ‘मानव’को दृष्टिकोणले नहेर्ने नीति, तिनका जीवनको मूल्य नमान्ने व्यवहार, र ‘सुरक्षाको नाममा’ गरिएको अन्धाधुन्ध हिंसा मानवता विरोधी अपराध हुन् । आज आवश्यक छ कि अन्तर्राष्ट्रिय समुदाय, विशेषतः राष्ट्रसंघ, मानवअधिकार परिषद् र क्षेत्रीय शक्तिहरूले निष्पक्ष, साहसी र दण्डमूलक कदम चालून् - किनकि गाजामा भइरहेको घटनामा ‘मौन’ रहनु स्वयं सह-अपराध बन्नु हो ।

# कुकुरसँग बस्दै भुक्न थाले ८ वर्षीय बालक

एजेन्सी । थाइल्याण्डको उत्तरादित प्रान्तमा एक हृदयविदारक घटना सार्वजनिक भएको छ, जहाँ एक ८ वर्षीय बालक वर्षौंदेखि आफ्नै आमाको बेवास्ता र लागूपदार्थ दुर्व्यसनको कारणले कुकुरहरूसँग बस्न बाध्य भएका थिए । लामो समयसम्म कुकुरको संगतमा रहेका ती बालक अहिले मानिससँग बोल्न नजानी कुकुरझैं भुक्न थालेका छन् ।

बाल अधिकार संरक्षणमा क्रियाशील संस्था फाउन्डेशन फर चिल्ड्रेन एन्ड वुमेन की अध्यक्ष पाविना होङसाकुललाई उत्तरादितस्थित लाप लाए जिल्लाको एक विद्यालयका प्रधानाध्यापकले बालकको अवस्थाबारे जानकारी गराएपछि घटनाको सार्वजनिक उजागर भएको हो ।

प्रधानाध्यापकका अनुसार ती बालकलाई उनकी आमा एकपटक मात्रै विद्यालय ल्याएकी थिइन् र त्यो पनि सरकारी सहयोग प्राप्त गर्ने उद्देश्यले । त्यसपछि उनले छोरालाई न त विद्यालयमा भर्ना गरिन्, न त घरमै स्याहार गरिन् । आमाको उपेक्षा र दाजुको बेरुखी व्यवहारका कारण बालक घरभित्रै पनि एक्लिएका थिए । सान्त्वना र सुरक्षा खोज्दै ती बालक गाउँमा रहेका भुस्याहा कुकुरहरूको समूहसँग बस्न थाले । समयक्रममा उनले कुकुरसँगै खेल्न, खान र सुत्न थाले । यत्तिसम्म कि उनले बोल्नै छोडेर कुकुरको बोली नक्कल गर्न थाले – भुक्न थाले ।

घटनाबारे सूचना पाएपछि पाविना होङसाकुलले स्थानीय प्रहरीसँग समन्वय गरी छानबिन अघि बढाइन् । अनुसन्धानमा बालकको ४६ वर्षीया आमा र २३ वर्षीय दाजु दुवै लागूपदार्थ दुर्व्यसनमा लिप्त रहेको पुष्टि भयो ।

छिमेकीहरूका अनुसार ती महिला प्रायः मागेर खाने गर्थिन् र लागूपदार्थ सेवनका कारण समाजबाट टाढिएकी थिइन् । यस्तो अवस्था देखेर अन्य बालबालिकाले पनि ती बालकसँग खेल्न छाडेका थिए ।

हाल ती बालकको उद्धार गरी उत्तरादित बाल गृहमा राखिएको छ । उनी बोल्न नसक्ने अवस्थामा रहेकाले विज्ञहरूको सहयोगमा उनलाई फेरि मानव भाषा सिकाउने प्रयास भइरहेको छ । थाई सरकारले बालकको औपचारिक शिक्षा सुनिश्चित गर्ने प्रतिबद्धता जनाएको छ ।

गोपनीयताका कारण बालकको नाम भने सार्वजनिक गरिएको छैन ।
– थाई पत्रिका ’खाओसोद’ का आधारमा

थिमि टाइम्स साप्ताहिक

– छिमेकी तथा आफना साथीभाइको निन्दा गर्ने बानी परापूर्व कालबाटै मानिसको मनोरंजनको विषय बन्दै आएको छ ।

- प्रेमचन्द

## सम्पादकीय

### डुबान काठमाडौं उपत्यकाको नियति बन्नुमा दोषी को ?

काठमाडौं उपत्यकाका नदी किनारामा डुबानको समस्या बढ्दै गएको देखिएको छ । तर बाढीको यो समस्या भने प्राकृतिकभन्दा बढी मानवनिर्मित समस्याको रुपमा देखिन्छ । पछिल्ला वर्षहरूमा उपत्यकाभित्रका नदीहरूमा बाढीको समस्या तीव्र हुँदै गएको देखिन्छ । तर जलवायु तथ्यांकले भने वार्षिक वर्षाको औसतमा खासै परिवर्तन आएको देखाउँदैन । यसको अर्थ, बाढीले निम्त्याएको विनाश यहाँकै बासिन्दाहरुका कारण आफैंले निम्त्याएको समस्या हो । तर पनि यसलाई नदीको कारण देखाउँदै दोष थोपर्ने कार्य सरकारमा बस्ने र आम सर्बसाधारणको ठम्याई रही आएको छ ।

नदी किनार मिचेर गरिएको अनियन्त्रित बस्ती विस्तार र जमिनको पानी सोस्ने प्राकृतिक स्वरुपमा सिमेन्टेड ढलान र कक्रिटको संरचनाको विकासले बाढीको जोखिम बढाएकोमा भने कसैले चासो दिएको देखिदैन । जब पानी जमिनले सोस्न सक्दैन, त्यो सिधै बगेर नदीमा पुग्छ । तर नदीको बहाव क्षेत्र साँघुरो भएकाले पानीको बेग तीव्र हुनुका साथै नदीका दाँया बायाँ बग्न थाल्छन्, जसले घर तथा अन्य संरचनामा क्षति पुऱ्याउँछ ।

यही सन्दर्भमा विपद् जोखिम न्यूनीकरण तथा व्यवस्थापन कार्यकारी समितिले चोभारको गल्छीमा रहेको प्राकृतिक चट्टान नदीको बहावमा अवरोध बनेको ठहर गरेको थियो । यसकै आधारमा गल्छी फराकिलो बनाउने चर्चा पनि भयो । यो समाचार सार्वजनिक भएपछि स्थानीय समुदायले चोभारको गल्छी भत्काउने प्रयास भइरहेको भन्दै सरकारको आलोचन गर्दै आक्रोश प्रकट गरे ।

स्थानीयले गल्छी ऐतिहासिक र धार्मिक दृष्टिकोणले महत्वपूर्ण भएको भन्दै चट्टान नछुन चेतावनी दिए । सामाजिक सञ्जालमा विषय अतिरञ्जित हुँदै गएपछि सहरी विकास मन्त्रालयले गल्छी चौडा गर्ने वा चट्टान हटाउने कुनै योजना नरहेको स्पष्टिकरण दिनुपऱ्यो ।

यो घटनाले सरकार र समाज दुवैलाई गम्भीर पाठ सिकाएको छ– तथ्यबिनाको सूचनामा विश्वास गर्नुको खतरा । साथै, कुनै पनि विकास योजनामा स्थानीय भावना र भूगर्भीय संवेदनशीलता बुझेर अघि बढ्नुपर्ने कुरा पनि प्रष्ट भएको छ ।

विशेषज्ञहरूको चेतावनीअनुसार, चोभार गल्छीमा रहेका चट्टान हटाउने प्रयास गम्भीर भूगर्भीय असरसहितको आत्मघाती कदम हुन सक्छ । विस्तृत वैज्ञानिक अध्ययनबिना यस्तो प्रयास गर्नु अस्वीकार्य हुनुका साथै खतरनाक पनि हुनेछ । साथै यसले शहर भित्रको समस्यालाई समाधान गरे पनि त्यसभन्दा बाहिर पुनः त्यही समस्या निम्त्याउने खतरा रहन्छ । हाल एक स्थानको समस्याको समाधान हुने बितिकै पुनः त्यस भन्दा पर त्यही प्रकृतिको अर्को समस्या देखिने गरको छ । यसरी सरकार र सरकारमा बस्नेहरुको मनोविज्ञानमा नै तत्कालको समस्या मात्र सुल्झाउने र त्यसले दीर्घकालिन रुपमा पुऱ्याउने असरको बारेमा नसोच्ने प्रवृतिकै कारण पनि उपत्यकामा वर्षाको समयमा समस्या देखिएको हो ।

अर्कोतर्फ, नदीको बहाव क्षेत्र मिचेर गरिएको बस्ती विकास रोक्न र नदी किनारको संरक्षणलाई प्राथमिकता दिन नसके उपत्यकामा डुबान र बाढी अब नियमित रूपमा हरेक वष दोहोरिने निश्चित छ ।

अब पनि समय छ – आत्मघाती गल्ती दोहोऱ्याउनुको सट्टा दीर्घकालीन सोच र वैज्ञानिक अध्ययनमा आधारित योजनामा लाग्ने । अन्यथा, काठमाडौं उपत्यका भविष्यमा पनि वर्षेनी डुबानमा परिरहनेछ ।

# एसईईका बहुआयाम र "घोकन्ती विद्या धावन्ती खेती"

● *प्रेम गैरे क्वान्टम*

एसईईको नतिजा राष्ट्रिय परीक्षा बोर्डले प्रकाशनमा ल्याउँदा एकाध हप्ता नेपाली समाज तरंगित र व्यस्त बन्यो। एसएलसीदेखि एसईईको यात्रासम्म हामीले त्यही देखेका छौँ। वर्गीय समाजमा खुशीको स्तर वर्गीय हुनु अस्वाभाविक होइन। अन्यथा नमान्नुहोला, ४-३.६, ३.६-३.२, ३.२-२.८, २.८-२.४, २.४-२.०, २.०-१.६, र ननग्रेडेडजस्ता ग्रेड र अंक पुँजीवादले पैसाको मुठोसँग साट्ने 'एसईईमय' खुसीयालीका उचनिच ग्रेड हुन्। 'हुनेहरू'को खुसी माथिल्लो ग्रेडको हुन्छ। 'नहुने'हरूको एवं रितले खस्कँदै तलसम्म पुग्छ। करिब डेढ सय वर्षअघि अर्थात् वि.सं. १९३६ मा राज्यबाट सम्पूर्ण खर्चको व्यवस्थापनसहित मेट्रीकुलेसनको परीक्षामा सामेल हुन कलकत्ता विश्वविद्यालय पटाइएका जंगबहादुर राणाका भतिज खड्कशमशेरले सँगालेका उत्सुकता र उत्साहमय अनुभव एआई कालिन एसईईसम्म आइपुग्दा समेत निम्न वर्गीय तप्काको अधिक मानिसका कुनै पनि पुस्ताले अनुभूत गर्न पाएको छैन। तैपनि हामी अचम्मित हुँदैनौ किनकि यस्तो जनसाङ्ख्यिकी नेपाली सरहदमा बाक्लो नै छ।

ऐतिहासिक पृष्ठभूमि

१९९० सालदेखि २०६१ सालसम्मको कथित बोर्ड टपरहरूको लहरलाई मिहिन ढंगबाट विश्लेषण र संश्लेषण गर्दा वर्गीयता, धार्मिक सत्ता, पितृसत्ता, जात व्यवस्था, क्षेत्रीयता र प्रतिस्पर्धाको डन्डा चलाइरहने तीव्र-उत्पिडनकारी राज्य व्यवस्थाद्वारा संरक्षित शिक्षा प्रणाली नै देखिँदो रहेछ। २०७२ सालदेखि अस्तित्वमा ल्याइएको एसईई अर्थात् माध्यमिक शिक्षा परीक्षाको एक दशकको तथ्यांक हेर्दासमेत उत्पीडितहरू बदहालमै छन्। नेपालको विद्यमान शिक्षा प्रणालीले निम्त्याएका खराबीहरूलाई प्रष्ट्याउने जमर्को यहाँ गरिन्छ।

वर्गीयता- १९९० सालको मेट्रीकुलेसनदेखि २०८१ सालको एसईईका तथ्यांकीय दस्ताबेज सरसर्ती हेर्दा पनि उच्च वर्गीय घनघोर उत्पीडनले निम्न वर्गीय मानिसलाई निरन्तर डामिरहेको देखिन्छ। कलकत्तादेखि पटनासम्म, दार्जिलिङदेखि देहरादुनसम्म, ठुलादेखि साना शहरमा संचालित महँगा निजी विद्यालयहरूसम्म जुनै सामाजिक व्यवस्था (क्रमशः राणा शासन, प्रजातन्त्र, पञ्चायत, बहुदल र गणतन्त्र) भए पनि उही आर्थिक सम्पन्नता र साधन स्रोतले मैमत्त वर्गले नै शिक्षा क्षेत्रमा अविच्छिन्न राईंदाईं गरिरहेको छ। निश्चित शासक वर्गको कब्जामा रहेको शैक्षिक क्रियाकलाप र उपलब्धि स्वयं तिनकै दम्भ प्रदर्शन र आत्मरतिको खेल बन्न पुग्यो। करिब एक शताब्दीसम्म पनि रूपमा परिवर्तित तर सारमा उही हालतमा शैक्षिक क्षेत्र रहनुले के पुष्टि गर्छ भने वर्गीय समाज जीवित रहेसम्म शोषक वर्गको शोषणको हतियारको रूपमा 'शिक्षा'ले पनि काम गरिरहँदो रहेछ।

एकल धार्मिकता

नेपालको शिक्षा क्षेत्र मूलतः गुरुकुलीय परम्परामा आधारित भएकोले यसमा एकल धार्मिक प्रभाव जबर जस्त रहनु अस्वाभाविक होइन। तर राज्य स्तरबाट युगौंसम्म कुनै एकल धार्मिक आस्थामा आधारित शिक्षा पद्धतिलाई बलात् लागू गरिरहनु आगामी पुस्तालाई पक्षघातको स्थितिमा पुऱ्याउनु हो। संवैधानिक रूपमा देश धर्म निरपेक्ष भइसक्दा पनि शिक्षालयहरूमै एकल धार्मिक अनुष्ठान या कर्मकाण्ड गर्दा अन्य धर्मावलम्बीका विद्यार्थीलाई कस्तो असर पर्छ? सबैको या कसैको पनि धार्मिक कर्मकाण्ड र अनुष्ठान आजको युगमा, त्यसमा पनि विद्यालयमा उचित होइन, तर देवी देउताको पूजापाठले नै विद्या सफल हुन्छझैं गरी विद्यालयमा 'विद्या अनुष्ठान' जारी छ। पूजापाठ गरेपछि 'विद्याकी देवी' खुसी भई सहजै विद्या प्रदान गर्छिन् भन्दै त्यस्तो अन्धविश्वास कलिला मस्तिष्कमा रोप्ने अभ्यास जारी छ।

जहाँसम्म घरपरिवारकै 'जिउँदा देवी'को कुरा छ, १९९० मा एसएलसी परीक्षा बोर्ड (प्रवेशिका परीक्षा)को गठन हुँदा कुल ३४ जना विद्यार्थीमध्ये केवल १ जना मात्रै महिला विद्यार्थी थिइन्। करिब १०० वर्षअघि शैक्षिक क्षेत्रमा महिला पुरुष प्रतिनिधित्वको अनुपात १:३३ देखिन्छ। उक्त कालखण्ड अघि त महिलाको पहुँच शून्य नै थियो। नब्बेको दशकमा योगमायाको नेतृत्वमा बुलन्दी पारिएको पितृसत्ता/कर्मकाण्ड-शोषण विरुद्धको प्रतिरोधी कार्यक्रमका तिनको मागहरूको उपेक्षा र दमन गरियो। १९९८ असार २२ का दिन सामूहिक आत्महत्या गर्न दुरुत्साहन गर्ने राज्यसत्ता कुन हदसम्मको महिलाद्वेषी थियो भन्ने आकलन सहजै गर्न सकिन्छ। एकल धार्मिक राज्यसत्ताले आर्थिक, राजनीतिक एवं सांस्कृतिक क्षेत्रमा महिलाको भूमिकालाई कति किनारीकृत गरेको रहेछ भन्ने यी र यस्तै वियोगान्त ऐतिहासिक परिघटनाले सिद्ध गर्छन्।

जंगबहादुरको बेलायत भ्रमणपश्चात्, १९१० को मुलुकी ऐन निर्माणले लिखितम् रूपमै वैधानिक बाटोबाट जात व्यवस्था लागू र स्थापित गरियो। जहानियाँ राणा शासनको एक शताब्दीभन्दा लामो कालखण्ड हेर्दा पनि दलित समुदायको स्थिति 'कालो अक्षर भैंसी बराबर'मात्रै नभई पशुतुल्य जीवन थियो। एक तहको मानवीय जीवन जिउने अवसर ००७ सालको परिवर्तनपश्चात् पाएका हुन्। त्यहाँबाट यहाँ आइपुग्दासमेत, सरकारी तथ्यांक विभागले चालीस प्रतिशत दलित महिला निरक्षर रहेको तथ्य भर्खरै सार्वजनिक गर्दासमेत लज्जाबोध नहुने सरकार हामीले झेलिरहेका छौं। सदियौंददेखि आरनमा धातु पगाल्ने र पोसाक निर्माणलगायत ज्ञानबाट प्रशिक्षित दलित समुदायको ज्ञान, अनुभव र पद्धतिलाई संश्लेषण गर्नेतर्फ राज्यले रुचि देखाएको भए विज्ञान प्रविधिको विकास र वैज्ञानिकको संख्या आक्रामक ढङ्गले अगाडि बढ्ने थियो। उल्टै समाजका शिल्पी र वैज्ञानिक समुदायलाई छोइछिटोको व्यवस्थापनमै लागिरह्यो राज्य।

हालको नेपाल भूखण्डमा विकसित सभ्यता र संस्कृतिमा वैभवशाली आदिवासी-जनजाति अर्थात् उत्पीडित राष्ट्रहरूलाई उनीहरूको भाषा र रैथाने मौलिक ज्ञानबाट बेदखल बनाउँदै लगियो। शासक वर्गको एकांकी ज्ञानमिमांसामा धकेलेर जात व्यवस्थाको कुटिल संरचनाको साँचोमा ढालियो। उचनिचमय जातको हिसाबकिताब खोज्दै आफ्नो भाषा बिरानो र संस्कृति नौलो लाग्ने अवसादको मनस्थितिमा उत्पीडित राष्ट्रहरूलाई पुऱ्याइयो। जन्मिँदादेखि रक्सी बनाएको देखेर र सीप जानेर समेत हुर्केको जनजाति बालकको ज्ञानलाई 'डिस्टिलेसन प्रक्रिया'सँग जोडेर मौलिक पाठ्यक्रम तयार पार्ने चेतना स्तरमा यो राज्य कहिले पुग्ने होला?

क्षेत्रीयता

हाम्रो शिक्षा प्रणाली पहाडिया अन्धराष्ट्रवाद र काठमाडौंवादी छ। यस्तो औपचारिक शिक्षा प्रणालीले हिमाल, मधेस र खसान क्षेत्रलाई प्रबोधनात्मक अवसरबाट च्युत बनाएर आतंकित मनस्थितिमा पुऱ्याइदिएको छ। भारतीय उपमहादिपको 'आयुर्वेद' र तिब्बती पठारको 'सोवारिग्पा' उपचार पद्धतिलाई विद्यमान शिक्षा प्रणालीले बराबर आँखाले हेर्नू पर्ने हो, तर त्यसरी हेर्दैन। "मुहुरले धान खायो" उत्तर लेख्ने थारुभाषी र "मुसाले धान खायो" उत्तर लेख्ने खसनेपालीभाषी विद्यार्थीले बुझेको विषयवस्तु एउटै हो। "माडौमा पूजा गरिन्छ", "ठानमा पूजा गर्छ ", "माङहिममा पूजा हुन्छ ", "मन्दिरमे पूजा कैल जाइत अछि" क्रमशः खस, मगर, किराँत र मैथिलीभाषीले लेख्दा वा बोल्दा अशुद्ध वा खिसीटिउरीको विषय बन्नु र एसईईको परीक्षा प्रणालीले यी विविधता नचिन्नु वा तिनको उपेक्षा गर्नु सदासर्वदा गलत र अन्यायपूर्ण काम हो। एससीईईमा त्यही भइआएको छ।

प्रतिस्पर्धात्मकता

असमान वितरण प्रणालीले आजको समाज असमान छ, अवसर पनि असमान हुने नै भयो। सीमित स्रोत साधनमाथि निश्चित वर्गको हाली मुहालीका कारण आर्थिक, राजनीतिक र सांस्कृतिक हिसाबले बहुसंख्यक जनता उत्पीडित छन्। यस्तो दुरावस्थामा कसरी 'हुने र नहुने वर्ग'बीच प्रतिस्पर्धा हुन सक्ला? यस्ता प्रकारका भिडन्तमा हुनेहरू स्वतः विजयी र नहुनेहरू विजित हुने पक्कापक्की हुन्छ। "साँढेको जुधाई, बाच्छाको मिचाई" हुन पुग्छ यस्ता 'प्रतिस्पर्धा'।

संश्लेषित ज्ञानको भुङ्गोमा बाल मस्तिष्कलाई धकेलिदिएर प्रतिस्पर्धात्मक चेतको विकास गर्ने र एकले अर्कोलाई उच्छेदन गर्दा आनन्द महसुस हुने यन्त्र-मानव उत्पादन र पुनःउत्पादनको दुष्चक्र चलिरहेको समाजमा। यस्तोमा, नविनतम् ज्ञान निर्माण र मानव विकासको शृङ्खला नै अवरुद्ध हुने स्थितिको सन्निकट छ मानव समुदाय। पुस्ता-दर पुस्ता शिक्षा क्षेत्रमा पकड र साधन स्रोतले सम्पन्न परिवारको कुनै विद्यार्थी र निरक्षर साथै गरीब पारिवारिक पृष्ठभूमि भएको अर्को विद्यार्थी संयोगले एउटै विद्यालय अध्ययन गर्ने मौका पाए भने पनि तिनको प्रतिस्पर्धात्मक कसरी समान होला? कमजोर समुदाय/वर्गबाट आएको विद्यार्थी उत्साहित वा आतंकित मनस्थितिमा विद्यालय कोठामा छिर्ला? सहजै अनुमान गर्न सकिन्छ।

उल्लेखित सामाजिक अन्तर्विरोधहरूलाई कुनै पनि एसईई वा माथिल्लो स्तरको शैक्षिक पाठ्यक्रममै किन समावेश गरिँदैन? एसईई सकेका विद्यार्थी साथीहरूले यो प्रश्न जोडतोडका साथ उठाउनु पर्ने बेला आएको होइन? आलोचनात्मक चेतको न्यूनीकरण र अनुमोदक चेतको बढोत्तरीद्वारा अबको पुस्ताले नयाँ समस्याको नयाँ उत्तर ठम्याउने स्थितिमा पुग्न सक्ला त? जति सामाजिक-आर्थिक रूपमा समृद्ध भयो, उति उत्कृष्ट कहलिने, महिलालाई गुमराहमा पारेर पुरुषले अवसर हडप्ने, कथित उच्च जात शासक र अन्य शासित हुने, पहाडियाले हिमाली र मधेसीलाई छिर्के हान्ने, काठमाडौं निवासीले कर्णाली पारीका मानिसलाई मानिसको दर्जामा गन्ती नगर्ने र प्रतिस्पर्धामा कमजोरलाई बलियोले पछार्ने र विदेशी गल्ली चहार्ने नवपुस्ता उत्पादन गर्ने अलावा अरू केही हुती राख्दैन विद्यमान शिक्षा प्रणाली।

'घोकन्ती विद्या धावन्ती खेती' अवधारणाद्वारा प्रशिक्षित भएर कुनै विद्यार्थी सुगा रटाइको डिग्रीमा अब्बल ठहरिएला, परन्तु तार्किक क्षमताको परीक्षामा उसले दश पुल्टुङ खाने निश्चित प्रायः छ। आत्मकेन्द्रितको विलोममा समाज केन्द्रित अवधारणाद्वारा निर्देशित सचेतताले मात्रै सहयात्रात्मक शिक्षण पद्धतिको विकास र प्रवर्द्धन गर्न सक्छ।

संकुचित ज्ञानमिमांसाको फलकलाई विस्तारित गर्नुपर्ने भएको छ। विद्यार्थीको रुचि र क्षमताअनुरूप विज्ञान र प्रविधिमा आधारित अन्वेषणात्मक,अनुसन्धानात्मक, विश्लेषणात्मक, प्रयोगात्मक र सिर्जनात्मक शिक्षा पद्धतिको विकास गर्न अत्यावश्यक छ। अन्यथा, बहुसंख्यक उत्पीडित वर्गको रोदनयुक्त आँसु-आहालको बीचमा ठडिएको अग्लो धरहराको टुप्पोमा बसेर मुट्ठीभरका मनमौजी शोषक वर्गले बर्सेनि औपचारिक शिक्षाका अनेकन् परीक्षाहरूको नाटक मञ्चन गर्दै र स्वघोषित सर्वोत्कृष्ट प्रमाणित गर्दै हाम्रै रमिता हेरिरहने छन्।

उकालोबाट

# पूर्वाधारदेखि पर्यटनसम्म चाँगुनारायण नगरपालिकाको तीन वर्षे यात्रा: उपलब्धि र चुनौती




भक्तपुर । चाँगुनारायण नगरपालिकाका जनप्रतिनिधिले कार्यभार सम्हालेको तीन वर्षे अवधिमा (२०७९-२०८१) नगरमा भौतिक, सामाजिक र सांस्कृतिक क्षेत्रहरूमा उल्लेखनीय प्रगति भएको दाबी गरिएको छ ।

नेपाल पत्रकार महासंघ भक्तपुर शाखाको आयोजनामा नगरकोटमा आयोजित अन्तरक्रियामा नगर प्रमुख जीवन खत्री, उपप्रमुख रमेश बुढाथोकी, वडा अध्यक्षहरू, प्रशासकीय अधिकृत तथा सरोकारवालाहरूले विगत तीन वर्षको मूल्यांकन प्रस्तुत गर्दै, योजनाबद्ध विकास र सामाजिक समावेशीताको दिशामा सशक्त पाइला चालिएको दावी गरे ।

पूर्वाधार विकासमा फड्को

नगरले तीन वर्षको अवधिमा नगरभित्रका प्रमुख सडकहरू कालोपत्रे, ढुङ्गा छाप्ने र सुदृढीकरण कार्य सम्पन्न गरेको जनाएको छ । सैनिक ब्यारेक-छालिङ, सरस्वती मन्दिर-सोमथली, कमलविनायक-नगरकोट सडक लगायतका मार्गहरूमा सुधार गरिएको छ ।

वडा नं. १ मा सामुदायिक भवन, वडा कार्यालय र ब्याडमिन्टन हल निर्माण, विभिन्न स्थानमा फुटपाथ निर्माण तथा नाली व्यवस्थापनजस्ता कामहरू सम्पन्न गरिएको बताइएको छ ।

शिक्षा र क्षमतामा लगानी

नगरपालिकाले पहिलोपटक ७३ जना युवालाई लोकसेवा तयारी कक्षा सञ्चालन गर्नुका साथै श्रेणीविहीन कर्मचारी र महिलाहरूका लागि विशेष तालिमहरू सञ्चालन गरेको छ ।

विद्यालयस्तरमा सरसफाइ र खानेपानी सचेतना कार्यक्रम, विद्यालय पोशाक वितरण, दिवा खाजा अनुदान, छोरी बचत खाता अभियान तथा माध्यमिक तहको नतिजा सुधार पहल अनुकरणीय रहेको बताइएको छ ।

संस्कृति संरक्षण र प्रवर्द्धन

पुराना ढुङ्गेधारा, विराट स्वरूप मन्दिर, फल्चा पुनःनिर्माणजस्ता संरचना संरक्षण गरिनुका साथै वागमती प्रदेशस्तरीय धिमे वाजा प्रतियोगिता, खुला नृत्य प्रतियोगिता जस्ता कार्यक्रमको आयोजनाबाट स्थानीय संस्कृति र परम्पराको जगेर्ना गरिएको छ ।

पर्यटन प्रवर्द्धन नयाँ युगतर्फ

'नगरकोट भ्रमण वर्ष २०८२' को उद्घाटन राष्ट्रपति रामचन्द्र पौडेलबाट गरिएको उल्लेख गर्दै नगरपालिका र सरोकारवाला निकायहरू मिलेर साइक्लिङ, पदयात्रा तथा प्रचार कार्यक्रम सञ्चालन गरिएको छ । नगरकोट, चाँगुनारायण मन्दिर लगायत क्षेत्रको समग्र पर्यटन विकासलाई केन्द्रमा राख्दै कार्यक्रमहरू अघि बढाइएको जनाइएको छ ।

तर, सरोकारवालाहरूले भ्रमण वर्षको घोषणा पूर्वाधार तयारी नहुँदै गरिएको भन्दै आलोचना पनि गरेका छन् । सडकबाहेक अन्य पूर्वाधार–पेयपानी, सार्वजनिक शौचालय, फोहोर व्यवस्थापन, ट्राफिक व्यवस्थापन, पार्किङ आदिको अभावले भ्रमण वर्ष प्रचारमै सीमित हुने चिन्ता व्यक्त गरिएको छ ।

स्वास्थ्य र सेवा विस्तार

छालिङ स्वास्थ्य चौकीलाई जिल्लामै उत्कृष्ट बनाउनु, चाँगुनारायण अस्पतालको चौथो वार्षिकोत्सवमा स्वास्थ्यमन्त्रीको सहभागिता, छात्राहरूलाई स्यानिटरी प्याड वितरण, पदालीमा शहरी स्वास्थ्य केन्द्र स्थापना तथा रक्तदान सेवा सहज बनाउन रेडक्रससमार्फत निःशुल्क रगत उपलब्ध गराउने व्यवस्था नगरपालिकाको उपलब्धि मानिएको छ ।

महादेव खोला खानेपानी आयोजना, कृषि औजार वितरण, स्मार्ट सिटी कार्ययोजना, भू-प्रविधि प्रवर्द्धन, कानुन संगालो प्रकाशन, युवा नगरसभा सञ्चालन जस्ता कार्यक्रमहरूले नगरपालिका योजनाबद्ध रूपमा अघि बढेको संकेत गर्छन् ।

मूल्याङ्कनमा इभि स्कोर ९२.५% र एफआरए स्कोर ८७% प्राप्त गर्नु पनि नगरको सुशासन र संस्थागत क्षमताको सूचकका रूपमा प्रस्तुत गरिएको छ ।

अवैध वालुवा खानी र नगरपालिका मौन

नगरको उपलब्धिभित्र केही गम्भीर चुनौती पनि देखिएका छन् । मनोहरा, चाँगुनारायण लगायत क्षेत्रमा विनाअनुमति भइरहेको वालुवा उत्खनन, मध्यरातमा टिपर सञ्चालन, धुलो तथा ध्वनि प्रदूषणका कारण वातावरणीय असन्तुलन र जनस्वास्थ्यमा असर पुगेको स्थानीयको गुनासो छ ।

पत्रकार तथा स्थानीयको निरन्तर निगरानीका बाबजुद पनि पालिकाले यसबारे ठोस कदम नचालेको भन्दै आलोचना गरिएको छ ।

सञ्चारकर्मीको सुझाव र नगर प्रमुखको प्रतिबद्धता

कार्यक्रममा सहभागी सञ्चारकर्मीहरूले विकासमा देखिएको असन्तुलन, योजनाको पूर्वतयारीको अभाव, वातावरणीय जोखिम र संवादहीनताप्रति चिन्ता व्यक्त गर्दै, पारदर्शिता र जवाफदेहिताको माग गरेका थिए ।

जवाफमा नगरप्रमुख खत्रीले बाँकी कार्यकालमा समावेशी, योजनागत र उत्तरदायी विकासलाई प्राथमिकता दिने प्रतिबद्धता व्यक्त गर्दै तथ्यमा आधारित पत्रकारिताका लागि आग्रह गरे ।

कार्यक्रममा उपप्रमुख रमेश बुढाथोकी, कार्यकारी प्रमुख मोहन श्रेष्ठ, पत्रकार महासंघ अध्यक्ष सुन्दर शिल्पकारलगायतले पनि सञ्चारकर्मीको निगरानी र सकारात्मक भूमिकाले सुशासन प्रवर्द्धनमा सघाउने विश्वास व्यक्त गरे ।

चाँगुनारायण नगरपालिकाले तीन वर्षको अवधिमा पूर्वाधार, शिक्षा, स्वास्थ्य, संस्कृति र पर्यटनमा केही सकारात्मक उपलब्धि हासिल गरे पनि पूर्वतयारीबिना घोषणा गरिएका योजना तथा अवैध दोहनजस्ता समस्याले ती उपलब्धिमा प्रश्न उठाउने वातावरण बनाएको छ । अब बाँकी कार्यकाल योजनागत सोच, निष्पक्ष कार्यान्वयन र उत्तरदायी नेतृत्वद्वारा सन्तुलित विकासको दिशामा अघि बढ्नुपर्ने

# एआईको सदुपयोगका लागि आफैलाई सोध्नुस् यी ४ प्रश्न

आजको प्रविधिमैत्री युगमा आर्टिफिसियल इन्टेलिजेन्स (एआई) दैनिक जीवनका धेरै पक्षमा प्रवेश गरिसकेको छ। गृहकार्य गर्न, अन्तर्वार्ताका उत्तर तयारी गर्नदेखि लिएर मानसिक स्वास्थ्य सल्लाह लिन समेत एआई प्रयोग हुन थालेको छ। लगातार रूपमा एआईमा तीव्र प्रगति भइरहेको छ, र प्रमुख प्रविधि कम्पनीहरू यसमा अरबौं डलरको लगानी गर्दै प्रतिस्पर्धामा होमिएका छन्।

च्याटजीपीटी जस्तो एआई मोडल सुरु भएको केही दिनमै करोडौं प्रयोगकर्तामा फैलिएको छ। संयुक्त राष्ट्रसंघ, युरोपेली युनियनलगायतका संस्था सहभागी रहेको अन्तर्राष्ट्रिय एआई सेफ्टी रिपोर्टअनुसार, यसको विकास गतिको कीर्तिमानी छ। माइक्रोसफ्टले सुरू गरेको को-पाइलट प्रणालीको आम्दानी २०२५ को दोस्रो त्रैमासिकसम्म १० अर्ब डलर नाघ्ने अपेक्षा गरिएको छ। गुगलले पनि आफ्नो खोज प्रणालीमा एआई जेनरेटेड सारांश प्रस्तुत गर्ने 'ओभरभ्युज' फिचर थपिसकेको छ।

एआई भविष्यमा अझ गहिरो रूपमा हाम्रो जीवनसँग गाँसिने निश्चित देखिएको छ। त्यसैले यसको सही र सुरक्षित प्रयोगका लागि केही महत्त्वपूर्ण कुराहरूमा विचार गर्नु आवश्यक छ। क्यानडाका कम्प्युटर वैज्ञानिक तथा हगिङ फेस स्टार्टअपकी क्लाइमेट लिड साशा लुचिओनी भन्छिन्– "एआई हाम्रो कामलाई विस्तार गर्ने औजार हो, तर यसलाई सन्तुलित र सचेत रूपमा प्रयोग गर्नु जरुरी छ।" उनले एआईको प्रभावकारी प्रयोगका लागि प्रयोगकर्ताले आफैँलाई चारवटा प्रश्न सोध्नुपर्ने सुझाव दिन्छिन्।

१. के तपाईंको आवश्यकता पूरा गर्न यो उपयुक्त एआई टुल हो?

एआई प्रणालीहरू विभिन्न खालका कार्यका लागि डिजाइन गरिएका हुन्छन्। कतिपय टुलहरू सामान्य प्रयोजनका हुन्छन् भने केही विशिष्ट क्षेत्रका लागि बनाइएका हुन्छन्–जस्तै, गणित समस्या समाधान गर्न, विज्ञानसम्बन्धी प्रश्नहरूको उत्तर दिन, वा भाषा अनुवाद गर्न।

त्यसैले, सबैभन्दा लोकप्रिय एआई प्रयोग गर्नु अघि, आफ्नो आवश्यकताअनुसार उपयुक्त र दक्ष टुल छनोट गर्नु बुद्धिमानी हुन्छ। बजारमा गणित समाधान गर्ने, रेसिपी सुधार्ने, वा धार्मिक मन्त्र सुझाव दिने जस्ता थुप्रै उपयोगी एपहरू उपलब्ध छन्।

२. के एआईले दिएको जानकारी भरपर्दो छ?

एआईले दिने उत्तर सधैं सही वा तथ्यमा आधारित नहुन सक्छ। कतिपय अवस्थामा 'विश्वसनीय' देखिने गलत उत्तरहरू दिन सक्छ। स्कूल, काम वा महत्त्वपूर्ण निर्णयमा प्रयोग गर्दा यसले भ्रम सिर्जना गर्न सक्छ।

त्यसैले, एआईको उत्तरलाई आलोचनात्मक सोचका साथ परीक्षण गर्नु आवश्यक हुन्छ। स्रोत मिलाउनुहोस्, दोहोर्याएर पढ्नुस् र आफूले पाएको जानकारीप्रति सजग रहनुस्।

३. तपाईं एआईलाई कस्तो जानकारी दिँदै हुनुहुन्छ?

एआई मोडलहरूले ठूला मात्रामा डेटा सङ्कलन गर्छन्। तपाईंले दिएको व्यक्तिगत जानकारी–फोटो, लेख, वा कुनै संवेदनशील विषय–उनीहरूले भविष्यमा मोडल सुधार गर्न प्रयोग गर्न सक्छन्।

त्यसैले गोपनीयता नीतिहरू बुझेर मात्र प्रयोग गर्न सुझाव दिइन्छ। संवेदनशील जानकारी–जस्तै व्यक्तिगत चिनारी, परीक्षा सम्बन्धी विवरण, वा यौनिकता–जस्ता विषयमा सजग रहनुपर्छ। केही प्रयोगकर्ताले सोधेका प्रश्नहरू अञ्जानमै सार्वजनिक ' डिस्कभर फीड'मा देखिएको उदाहरण मेटा एआईमा देखिएको थियो।

४. के तपाईंलाई साँच्चै एआई आवश्यक छ?

एआईलाई सहयोगी औजारको रूपमा प्रयोग गर्नुहोस्, सोच्ने कामको विकल्पको रूपमा होइन। के त्यो कार्य तपाईंले आफैं गर्न सक्नुहुन्छ? जटिल गणितको सवाल छ भने क्यालकुलेटर प्रयोग गर्न सकिन्छ कि?

नैतिकता वा व्यक्तिगत मामिलामा त एआई भन्दा आफ्ना वरिपरिको मान्छेसँग सल्लाह गर्नु उपयुक्त हुन्छ। एआईले भावनात्मक वा सामाजिक सन्दर्भमा विवेकपूर्ण निर्णय लिन सक्दैन।

साथै, एआईले अत्यधिक ऊर्जा र पानीको खपत गर्छ। डेटा सेन्टरहरू चिस्याउन ठूलो मात्रामा पानी प्रयोग हुन्छ, जसले वातावरणीय सन्तुलनमा असर पार्न सक्छ।

एआई हाम्रो जीवनको अभिन्न अङ्ग बन्दै गएको छ। तर यसको उपयोग बुद्धिमत्ता र जिम्मेवारीपूर्वक गर्न सकिएन भने यसले चुनौती पनि सिर्जना गर्न सक्छ। साशा लुचिओनी भन्छिन्– "प्रविधिको विकाससँगै हामी अझ बढी डिजिटल संसारमा डुबिरहेका छौँ, तर यसले हामीलाई मानिसको रूपमा छुट्याउने सृजनशीलता र सामाजिक सम्बन्धहरू जोगाइराख्न जरुरी छ।"

त्यसैले, एआईको प्रयोग गर्नु अघि आफूले के गर्दैछु भनेर गम्भीर विचार गर्नुपर्ने समय यही हो। - एजेन्सीको सहयोगमा

# फर्सीको बियाँ : शुक्रकीटको गुणस्तर सुधार देखि अनिद्राबाट राहत

काठमाडौँ । आजकालको व्यस्त जीवनशैली र असन्तुलित खानपानका कारण विभिन्न स्वास्थ्य समस्याहरू देखा पर्न थालेको छ । घण्टौंसम्म कुर्सीमा बसिरहनु, फास्ट फुड-जंक फुड खानु र निद्राको कमीले हाम्रो स्वास्थ्यमा नकारात्मक असर पारिरहेको छ ।

यस्तोमा हामीले आफ्नो आहारमा यस्ता सुपरफुडहरू समावेश गर्नु आवश्यक छ, जसले शरीरलाई भित्रबाट बलियो बनाओस् र यी चुनौतीहरूसँग लड्न मद्दत गरोस् । फर्सीको बियाँ यिनै सुपरफुडहरूमध्ये एक हो ।

फर्सीको बियाँ पोषक तत्त्वको खजाना हुन् । नेसनल लाइब्रेरी अफ मेडिसिनमा प्रकाशित एक अध्ययनअनुसार, फर्सीको बियाँमा पाइने भिटामिन, खनिज, एन्टी अक्सिडेन्ट र स्वस्थ फ्याटले रोग प्रतिरोधात्मक क्षमता बढाउन मात्र होइन, मुटु, मधुमेह, क्यान्सर, कलेजो रोग, पाचन र मानसिक स्वास्थ्यका लागि पनि अत्यन्त लाभदायक छन् ।

अध्ययनमा फर्सीको बियाँमा एन्टी माइक्रोबियल, एन्टी-इन्फ्लेमेटरी र एन्टी-अल्सर जस्ता औषधीय गुणहरू हुन्छन् भनेर पनि बताइएको छ । यिनको प्रयोग खाद्य पदार्थ र औषधिजन्य उत्पादनहरूमा गरिन्छ ।

फर्सीको बियाँमा कुन-कुन पोषक तत्त्व पाइन्छन ?

संयुक्त राज्य कृषि विभाग (यूएसडीए) अनुसार, फर्सीको बियाँमा प्रोटिन, फाइबर, स्वस्थ फ्याट, म्याग्नेसियम, जिङ्क र एन्टिअक्सिडेन्ट जस्ता आवश्यक पोषक तत्त्वहरू पाइन्छन्, जुन स्वास्थ्यका लागि अत्यन्त लाभदायक छन् ।

फर्सीको बियाँ हाम्रो स्वास्थ्यका लागि कसरी लाभदायक छन ?

फर्सीको बियाँमा ट्रिप्टोफ्यान नामक एमिनो एसिड पाइन्छ, जसले राम्रो र गहिरो निद्रा ल्याउन मद्दत गर्छ । यसमा पाइने भिटामिन ई र फेनोलिक कम्पाउन्डस्ले शरीर सुन्निनबाट र फ्री रेडिकल्सले हुने क्षतिबाट बचाउँछन् । त्यस्तै, ओमेगा-३ फ्याटी एसिड र म्याग्नेसियमले रक्तचाप र कोलेस्ट्रोलको स्तर सन्तुलित राख्न मद्दत गर्छन् । यसले मुटुको स्वास्थ्य राम्रो राख्छ ।

यसमा रहेको उच्च फाइबरले पाचन प्रणालीलाई सुधार्छ । साथै, म्याग्नेसियम, फस्फोरस र जिङ्कले हड्डीहरूलाई बलियो बनाउँछन् । यसको नियमित सेवनले स्तन र प्रोस्टेट क्यान्सरको जोखिम पनि कम गर्न सक्छ ।

फर्सीको बियाँमा पाइने जिङ्क, फाइटोस्टेरोल्स र ओमेगा-३ फ्याटी एसिडले पुरुषहरूको प्रोस्टेट स्वास्थ्य र प्रजनन क्षमता सुधार्न मद्दत गर्छ । त्यस्तै, यसमा पाइने लिग्नान्स जस्ता फाइटोएस्ट्रोजेन्सले महिनावारी बन्द हुनेका लक्षणहरूलाई कम गर्न सक्छन् ।

फर्सीको बियाँ खाने सही समय

फर्सीको बियाँ जुनसुकै बेला पनि खान सकिन्छ । तर बिहान खाली पेटमा, साँझको स्वास्थ्यकर खाजाको रूपमा वा राती सुत्नुअघि थोरै मात्रामा खानु राम्रो मानिन्छ ।

खानामा फर्सीको बियाँ समावेश गर्ने

यसलाई आफ्नो आहारमा धेरै तरिकाले समावेश गर्न सक्नुहुन्छ । जस्तै-

- रातभर भिजाएर राखेको फर्सीको बियाँ बिहान खाली पेटमा खान सकिन्छ ।
- तपाईँ यसलाई कम आगोमा सुख्खा भुटेर पनि खान सक्नुहुन्छ ।
- यसलाई मिसाएर स्मूदी वा प्रोटिन सेकमा थप्न सक्नुहुन्छ ।
- ओट्सको लागि टपिङको रूपमा प्रयोग गर्न सकिन्छ ।
- सलाद वा सुपमा मिसाउन सकिन्छ ।
- तपाईँ यसलाई अन्य बियाँहरू (सूर्यमुखी/चिया) र सुख्खा फलफूलसँग मिसाएर स्वस्थ खाजाको रूपमा लिन सक्नुहुन्छ ।

भुटेको, स्वादिष्ट वा काँचो फर्सीको बियाँमध्ये कुन बढी फाइदाजनक

बजारमा तीन प्रकारका फर्सीको बियाँ उपलब्ध छनः काँचो, भुटेको र स्वादिष्ट । तिनीहरूलाई खानु अघि तिनीहरूको भिन्नता र फाइदाहरू बुझ्नु आवश्यक छ ।

काँचो फर्सीको बियाँ

यो प्रशोधन गरिएको हुँदैन । त्यसैले, बियाँमा पाइने पोषक तत्त्वहरू पूर्ण रूपमा सुरक्षित रहन्छन् । यो सबैभन्दा स्वास्थ्यकर विकल्प हो ।

भुटेको फर्सीको बियाँ

यसमा फर्सीको बियाँ भुटेको हुन्छ । यसले यसको स्वाद बढाउँछ । तर यसलाई उच्च तापक्रममा भुट्दा वा नुन थप्दा केही स्वस्थ बोसो र भिटामिनहरू नष्ट हुन सक्छ ।

स्वादयुक्त फर्सीको बियाँ

यसमा अतिरिक्त नुन, चिनी, मसलाहरू थपिन्छन्, जसले स्वाद बढाउँछ तर स्वास्थ्य लाभहरू कम गर्छ । उच्च रक्तचाप वा पाचन समस्या भएका व्यक्तिहरूले यी खानु हुँदैन ।

के बच्चाहरूलाई फर्सीको बियाँ खुवाउन सकिन्छ ?

फर्सीको बियाँ सीमित मात्रामा बालबालिकालाई दिन सकिन्छ । यद्यपि, उनीहरूको उमेर र चपाउने क्षमतालाई ध्यानमा राख्नु आवश्यक छ । बियाँमा पाइने आवश्यक पोषक तत्त्वहरूले बालबालिकाको शारीरिक र मानसिक विकासमा मद्दत गर्दछ ।

३ वर्षभन्दा माथिका बच्चाहरूलाई यसलाई पिसेर सुप, खिचडी वा दहीमा मिसाएर दिन सकिन्छ । तिनीहरू घाँटीमा अड्कियोस् भनेर बच्चाले राम्ररी चपाउन सक्ने बियाँ मात्र दिनुहोस् ।

धेरै मात्रामा फर्सीको बियाँ खानु हानिकारक हुन सक्छ ?

धेरै फर्सीको बियाँ खानुमा कुनै हानि छैन । तर यसमा फाइबर, फ्याट र क्यालोरीको मात्रा राम्रो हुन्छ । त्यसैले यसलाई बढी खाँदा तौल बढ्ने वा पाचन समस्या हुन सक्छ ।

दैनिक कति फर्सीको बियाँ खान सुरक्षित छ ?

दैनिक १ देखि २ चम्चा (लगभग १५ देखि ३० ग्राम) फर्सीको बियाँ खानु सामान्यतया सुरक्षित र लाभदायक मानिन्छ ।

फर्सीको बियाँ कसले खानु हुँदैन?

पाचन समस्या, कम रक्तचाप वा खानाको एलर्जी भएका व्यक्तिहरूले सावधानीपूर्वक फर्सीको बियाँ खानुपर्छ । यसबाहेक, तौल घटाइरहेका व्यक्तिहरू र गर्भवती वा स्तनपान गराउने महिलाहरूले पनि यसलाई सीमित मात्रामा खानुपर्छ किनभने यसको अत्यधिक सेवनले ग्यास, पेट दुख्ने वा केही अवस्थामा हार्मोनल असन्तुलन जस्ता समस्याहरू निम्त्याउन सक्छ ।

साथै, कुनै पनि प्रकारको स्वास्थ्य समस्याको अवस्थामा, आफ्नो आहारमा फर्सीको बियाँ समावेश गर्नु अघि डाक्टरसँग परामर्श गर्न आवश्यक छ ।

# "पुर्खाया पलाः ख्वाँय्" स्मृति–काव्यको लोकार्पण




काठमाडौं । लोककवि राजभाइ जकःमिको सिर्जना "पुर्खाया पलाः ख्वाँय्" (पुर्खाको पदचाप) शीर्षक स्मृति-काव्य ग्रन्थको लोकार्पण समारोह नेपाल प्रज्ञा प्रतिष्ठानको देवकोटा सभाहलमा सम्पन्न भएको छ । बागमती प्रदेश सरकार, संस्कृति तथा पर्यटन मन्त्रालयद्वारा प्रकाशित उक्त कृति लोकार्पण कार्यक्रम नेपाल प्रज्ञा प्रतिष्ठानको मातृभाषा कोष तथा व्याकरण विभाग र नेवाः देय् दबू, जातीय परिषद्को संयुक्त आयोजनामा सम्पन्न भएको हो ।

समारोहका प्रमुख अतिथि तथा बागमती प्रदेशका सांसद पूर्वमन्त्री शैलेन्द्र मान बज्राचार्यले दीप प्रज्वलन गरी काव्य ग्रन्थको औपचारिक विमोचन गरेको थियो । कार्यक्रममा वरिष्ठ कवि योगेन्द्र प्रधानले पुस्तकलाई नेपालभाषामा रचित एक अनुपम ऐतिहासिक काव्य भन्दै, यसले नेवार समुदायका पुर्खाहरूको महत्वपूर्ण संघर्षको दस्तावेज प्रस्तुत गरेको धारणा व्यक्त गरे ।

भाषा आयोगका सदस्य सुरेश किरण मानन्धरले लेखकले लामो साधना र समर्पणका साथ तयार पारेको यस कृति बागमती प्रदेश सरकारबाट प्रकाशन हुनु गौरवको विषय भएको धारणा राखे । साहित्यकार हितकर वीर सिंह कंसाकारले 'पुर्खाया पलाः ख्वाँय्' काव्यले नयाँ पुस्तालाई पुर्खाको योगदानबारे जानकारी दिन उल्लेखनीय प्रयास गरेको बताए ।

कार्यक्रममा लोककवि जकःमिलाई संस्कृति तथा पर्यटन मन्त्रालयको तर्फबाट शुभकामना पत्र प्रदान गरिएको थियो । नेवाः देय् दबूका पूर्व अध्यक्ष तथा संरक्षक नरेश ताम्राकारले जकःमिलाई आदिवासी जनजाति पहिचानको आन्दोलनमा कविता मार्फत पुर्‍याएको योगदानको कदर गर्दै उनलाई लोककवि पदवीबाट सम्मान गरिएको स्मरण गरे ।

मुख्य अतिथि बज्राचार्यले जकःमिको काव्यले भाषा, साहित्य र संस्कृतिमा पुर्‍याएको योगदान उजागर गर्ने बताउँदै नयाँ पुस्ताले यसबाट पुर्खाको योगदानबारे गहिरो ज्ञान प्राप्त गर्ने अपेक्षा व्यक्त गरे ।

कार्यक्रमको सभाध्यक्ष तथा नेवाः देय् दबूका केन्द्रीय अध्यक्ष पवित्र बज्राचार्यले जकःमिलाई उपयुक्त व्यक्तिका रूपमा लोककवि पदवीमा सम्मान गरिएको बताउँदै आगामी दिनमा उनको रचनात्मक यात्रामा अझ सफलता प्राप्त होस् भन्ने शुभकामना व्यक्त गरे ।

कार्यक्रमको सञ्चालन जातीय परिषद्का सचिव मचाराजा महर्जनले गरेको थियो भने स्वागत मन्तव्य परिषद्का सदस्य तथा माली समाजका अध्यक्ष अमर नारायण मालीले राखेको थियो ।

समारोहमा लोककवि जकःमिले गाएको, शान्तराज शाक्यको निर्देशनमा तयार पारिएको शताब्दी पुरुष सत्यमोहन जोशीसम्बन्धी भिडियो गीत पनि प्रस्तुत गरिएको थियो ।

नेपाल देश र नेवार समुदायको समुन्नतिमा योगदान दिने ७१ जना नेवाः अग्रजहरूको काव्यात्मक जीवनकथा समेटिएको यो ग्रन्थ नेपालभाषाको एक ऐतिहासिक, मूल्यवान् र प्रेरणादायी कृति भएको सहभागीहरूले बताएका छन् ।

# महिला युरोप च्याम्पियनसिप : स्पेन क्वार्टरफाइनलमा प्रवेश, पोर्चुगलको आशा

काठमाडौं । स्पेनले यूईएफए महिला युरो-२०२५ को क्वार्टरफाइनलमा स्थान सुरक्षित गरेको छ । सोमबार राति स्विट्जरल्यान्डको स्टोकहर्न एरिनामा सम्पन्न खेलमा बेल्जियममाथि ६-२ को प्रभावशाली जित निकाल्दै विश्वकप विजेता स्पेन समूह ‘बी’को शीर्ष स्थानमा उक्लिएको हो ।

स्पेनको जितमा एलेक्सिया पुटेयसले दुई गोल गर्दै चम्किएकी थिइन् भने ऐरेन पाराडेज, एस्थेर गोन्जालेज, मारिओना काल्डेन्टी र क्लाउडियो पेनाले समान एक-एक गोल थपे । बेल्जियमका लागि जस्टिन र हान्नाह युरलिंग्सले एक-एक गोल गरे तापनि टोलीलाई हारबाट जोगाउन सकेनन् ।

खेलको पहिलो हाफमा स्पेनले २-१ को अग्रता बनाएको थियो भने दोस्रो हाफमा चार गोल थपेर जित सुनिश्चित गरेको हो । दुई खेलबाट ६ अंक जोडेको स्पेन क्वार्टरफाइनलमा पुग्ने पहिलो टोली बनेको छ । उता, दुई खेलमा अंकविहीन रहेको बेल्जियम प्रतियोगिताबाट बाहिरिएको छ ।

सोही राति भएको अर्को खेलमा पोर्चुगलले इटालीसँग १-१ को रोमाञ्चक बराबरी खेल्दै क्वार्टरफाइनलको सम्भावना जिवित राखेको छ । स्विट्जरल्यान्डको स्टेट डे जेनेभामा भएको उक्त खेलमा इटालीका लागि क्रिस्टियना गिरेलीले ७०औं मिनेटमा गोल गर्दै अग्रता दिलाएकी थिइन् । तर, खेलको अन्त्यतिर ८९औं मिनेटमा डियना गोमेजले गोल फर्काएर पोर्चुगललाई बराबरीमा ल्याइन् । इन्जुरी समयमा एना बोर्गेसले रातो कार्ड पाउँदै मैदान छोडे पनि पोर्चुगलको प्रदर्शनमा त्यसको खास असर परेन ।

बराबरीसँगै इटालीले दुई खेलबाट ४ अंक जोडेको छ भने पोर्चुगलले १ अंक बटुलेको छ । अब अन्तिम चरणको खेलपछि मात्र पोर्चुगलको क्वार्टरफाइनल यात्रा टुंगो लाग्नेछ ।

# रास्वपाको संसद् अवरोध निष्कर्षविहीन, समाधानको उपाय अर्थहिन

काठमाडौं, असार २४ ।

भिजिट भिसा प्रकरणलाई लिएर राष्ट्रिय स्वतन्त्र पार्टी (रास्वपा)ले सुरु गरेको संसद् अवरोध ४१ दिन पुगेको छ । तर, अवरोधको न त समाधान देखिएको छ, न आन्दोलनको ठोस उपलब्धि हासिल भएको छ । सरकार र रास्वपाबीच संवाद टुटेको छ, स्थिति झन् पेचिलो बनेको छ ।

सरकारले पूर्वमुख्यसचिव शंकरदास बैरागीको संयोजकत्वमा छानबिन समिति गठन गरिसकेको भए पनि रास्वपाले त्यसलाई ‘फासफुसे’ भन्दै अस्वीकार गरेको छ । गृहमन्त्री रमेश लेखकमाथि मानव तस्करीमा संलग्न रहेको आरोप लगाउँदै रास्वपाले संसद् अवरुद्ध गर्दै आएको छ । तर, लेखक अझै पनि पदमै छन् ।

रास्वपाको विरोध र बहिष्कारबीच पनि संसद् नियमित गतिमा चलिरहेको छ । बजेट प्रस्तुत भएको छ, विधेयकहरू पारित भएका छन् । नागरिकता र निजामती विधेयक पारित भइसकेका छन् भने प्रधानमन्त्रीको स्पेन भ्रमणबारे जानकारी समेत सदनमा सुनाइएको छ । रास्वपाका सांसद बेलमा उपस्थित भएर विरोध जनाए पनि, मुख्य कारबाहीमा तिनको उपस्थिति न्यून छ ।

रास्वपाका सांसदहरू स्वयं अब अवरोधले अपेक्षित दबाब सिर्जना गर्न नसकेको स्वीकार्न थालेका छन् । सांसदहरूबीच आन्दोलनको रणनीति फेरबदलको बहस चलिरहेको छ, तर स्पष्ट विकल्प अझै भेटिएको छैन । "सरकार हाम्रो कुरा सुन्दैन, हामी उसलाई मान्दैनौं, अब के गर्ने?" भन्ने रास्वपा सांसदहरूको प्रश्नले द्वन्द्वको अन्योल झल्काउँछ ।

रास्वपाले आफ्नो गतिविधिलाई सिकाइको चरणको रूपमा पनि हेरिरहेको छ । उपनेता विराजभक्त श्रेष्ठ भन्छन्, "हामी निरन्तर सिक्दैछौं । हामी पुराना पार्टीजस्तो होइनौं ।" एमालेले अघिल्लो कार्यकालमा नौ महिना संसद् अवरोध गर्दा पनि अपेक्षित उपलब्धि हासिल गर्न नसकेको सन्दर्भ दिँदै, रास्वपा आफैं अनुभव बटुलिरहेको छ । रास्वपाले भिजिट भिसा प्रकरणलाई लिएर सत्तारुढ कांग्रेससँग संवाद थालेको छ । उपसभापति स्वर्णिम वाग्ले, कार्यवाहक सभापति डीपी अर्याल लगायतका नेताहरूले कांग्रेस सभापति शेरबहादुर देउवासँग भेट गरेका छन् । यसले कांग्रेससँगको दूरी घटाएको र पार्टीभित्र सहकार्यको संकेत देखिएको छ ।

संसद् अवरोधले सांसदहरूलाई जनताका चासो र समस्याबारे आवाज उठाउन अवरोध बनिरहेको छ । रास्वपाका प्रवक्ता मनीष झाले संसमा नाराबाजी नगरेर अरूलाई धारणा राख्न दिने नीति अपनाइएको बताउँछन् । "बजेटबारे हाम्रो धारणा बाहिर प्रष्ट रूपमा राखिएको छ । समितिमा पनि सक्रिय सहभागिता रहेको छ," उनी भन्छन् ।

रास्वपाले समस्या समाधानमा सत्तापक्ष उदासीन रहेको आरोप लगाएको छ । सभामुख देवराज घिमिरेको भूमिकाप्रति पनि पार्टी असन्तुष्ट देखिन्छ । विशेषगरी साउन ३ गते नीलो रिबन बाँधेर गरिएको विरोधपछि सभामुख रास्वपाप्रति चिढिएको बुझाइ रास्वपाको छ ।

सभामुख घिमिरेले संसद् सञ्चालनमा सबै पक्षको सहकार्य आवश्यक रहेको बताउँदै, "संसद् अवरोध समस्याको समाधान होइन," भन्ने धारणा राखेका छन् ।

रास्वपाले उठाएको मुद्दा गम्भीर भए पनि यसको समाधानका लागि न सरकार जिम्मेवार बनेको देखिन्छ, न रास्वपाले आन्दोलनको विकल्प तय गरेको छ । यतिबेला रास्वपा संसद्को गतिविधिबाट पन्छिँदै जनअपेक्षा सम्बोधन गर्न असमर्थ देखिँदैछ । यथास्थितिमा रहिरहँदा, संसद् अवरोधले पार्टीलाई फाइदाभन्दा क्षतिनै पुर्‍याउने खतरा बढ्दै गएको छ ।

# मुलडरको ऐतिहासिक इनिङ्स, तर लाराको कीर्तिमानप्रति सम्मान

एजेन्सी । टेस्ट क्रिकेटमा कीर्तिमान तोड्ने दुर्लभ अवसर पाएका दक्षिण अफ्रिकी कप्तान वियान मुलडरले इतिहास र सम्मानको बिच सहज तर असामान्य निर्णय लिए । जिम्बाब्वेविरुद्धको दोस्रो टेस्टमा ३६७ रनमा अविजित रहँदा पनि उनले वेस्ट इन्डिजका ब्रायन लाराको ४०० रनको विश्व कीर्तिमान तोड्ने प्रयास गरेनन् ।

२७ वर्षीय मुलडरले बुलवायोमा टस जितेर पहिलो ब्याटिङ गर्ने निर्णय गरेका थिए । पाँच विकेटको क्षतिमा टोलीले ६२६ रन बनाएको अवस्थामा कप्तानले इनिङ्स घोषणा गरे । मुलडर लाराको कीर्तिमानभन्दा मात्र ३३ रनले पछाडि रहे । लाराले २००४ मा इंग्ल्याण्डविरुद्ध एन्टिगुवामा ४०० रनको अविजित पारी खेलेका थिए, जुन टेस्ट क्रिकेटको अहिलेसम्मकै उच्च व्यक्तिगत स्कोर हो ।

"टोलीको आवश्यकताले पहिलो प्राथमिकता लिन्छ," मुलडरले इनिङ्स घोषणाको निर्णयबारे प्रतिक्रिया दिँदै भने । "हामीले पर्याप्त रन बनाइसकेका थियौं, अब खेल जित्न बलिङतर्फ ध्यान दिन जरुरी थियो ।"

तर यो निर्णयको पछाडि भावनात्मक पाटो पनि छ । मुलडरले लाराको क्रिकेटीय योगदानप्रति श्रद्धा व्यक्त गर्दै भने, "ब्रायन लारा एउटा लेजेन्ड हुन् । उनका जस्ता व्यक्तिहरूको कीर्तिमान जोगिनु विशेष कुरा हो ।" प्रशिक्षक शुरी कनराडको सल्लाह पनि उनले स्मरण गरे, जसले उनलाई भनेका थिए, "लेजेन्डहरूको कीर्तिमान त्यही रहन देऊ ।"

मुलडरको ३६७ रन टेस्ट क्रिकेट इतिहासको पाँचौं सर्वाधिक व्यक्तिगत स्कोर हो । साथै, यो दक्षिण अफ्रिकाका खेलाडीद्वारा बनाइएको सबैभन्दा उच्च व्यक्तिगत स्कोर पनि हो, जसले हाशिम अमलाको ३११ रनको रेकर्डलाई ओझेलमा पारेको छ । उनले २९७ बलमा तेहेरो शतक पूरा गर्दै टेस्ट क्रिकेटको दोस्रो सबैभन्दा छिटो तिहेरी शतक बनाएका थिए ।

यो उनका लागि टेस्ट करियरको तेस्रो शतक हो भने लगातार दोस्रो, जसमा पहिलो टेस्टमा उनले १४७ रन बनाएका थिए । चोटका कारण नियमित कप्तान टेम्बा बभुमा र अनुभवी खेलाडी केशव महाराज अनुपस्थित रहेपछि मुलडरले कप्तानीको जिम्मेवारी सम्हालेका थिए ।

यो घटना क्रिकेट इतिहासका केही अन्य उदाहरणहरूसँग तुलना योग्य छ । सन् १९९८ मा, अस्ट्रेलियाका कप्तान मार्क टेलरले पाकिस्तानविरुद्ध ३३४ रन बनाएर इनिङ्स घोषणा गरेका थिए–त्यो रन डन ब्राडम्यानको कीर्तिमान बराबरी हो । त्यसको पाँच वर्षपछि, म्याथ्यू हेडनले जिम्बाब्वेविरुद्ध ३८० रन बनाएर त्यो कीर्तिमान तोडे ।

टेस्ट क्रिकेटका शीर्ष व्यक्तिगत स्कोरहरू:

४०० – ब्रायन लारा (वेस्ट इन्डिज) खक इंग्ल्याण्ड, २००४
३८० – म्याथ्यू हेडन (अस्ट्रेलिया) खक जिम्बाब्वे, २००३
३७५ – ब्रायन लारा (वेस्ट इन्डिज) खक इंग्ल्याण्ड, १९९४
३७४ – महेला जयवर्दन (श्रीलंका) खक दक्षिण अफ्रिका, २००६
३६७– वियान मुलडर (दक्षिण अफ्रिका) खक जिम्बाब्वे, २०२५

मुलडरको निर्णयले प्रतिस्पर्धा र व्यक्तिगत कीर्तिमानभन्दा माथि उठेर खेलभावनाको उदाहरण प्रस्तुत गरेको छ–कसरी खेल अझै पनि केवल रनभन्दा परको कुरा हो ।

# रसुवागढी नाका क्षतविक्षत, ७ को शव भेटियो, १८ जना अझै सम्पर्कविहीन

काठमाडौं । मित्रराष्ट्र चीन र नेपाल जोडिने रसुवागढी नाकामा मंगलवार बिहानै बाढीले तहसनहस बनायो । नेपाल र चीन जोड्ने मितेरी पुलमा क्षति त हुँदा दुईतर्फी आवागमन बन्द भएको छ भने १८ जना बेपत्ता भएका छन् ।

बिहान एक्कासी नेपाल-चीन सीमामा रहेको लेन्दे (भोटेकोशी) खोलाबाट आएको बाढीले नेपालतर्फ ठूलो क्षति भएको छ । रसुवागढी नाकाको सुक्खा बन्दरगाहमा राखिएका केही विद्युतीय गाडी (ईभी) र कन्टेनरसहित करिब १०० वटा गाडी बगाएको अनुमान गरिएको छ । यद्यपि, यकिन तथ्यांक अझै आइसकेको छैन ।

जिल्ला प्रशासन कार्यालय रसुवाका सहायक प्रमुख जिल्ला अधिकारी ध्रुव प्रसाद अधिकारीका अनुसार हालसम्म १८ जना सम्पर्कविहीन भएका छन् । सम्पर्कविहीन हुनेमा तीन जना प्रहरी, ९ जना सर्वसाधरण र ६ जना चिनियाँ नागरिक छन् ।

सेना, प्रहरी, सशस्त्र प्रहरीले हालसम्म बाढीमा फसेका ५७ जनाको उद्धार गरिसकेको छ । दाउरा खोज्न घरबाट केही परको खोलामा पुगेका नुवाकोटको विदुर नगरपालिका-९ का ६७ वर्षीय पाल्देन तामाङ र उनकी ६२ वर्षीया श्रीमती मंगलीमाया तामाङले करिब १ घण्टा सिसौंको रुखमा चढेर ज्यान जोगाएका थिए । सेनाको हेलिकप्टरमार्फत् उनीहरूको उद्धार भयो ।

सुरक्षाकर्मीहरूले रसुवागढी जलविद्युत आयोजनामा फसेका कामदारको पनि उद्धार गरेका हुन् । सशस्त्र र नेपाल प्रहरीसँग समन्वय गरेर हेलिकप्टरमार्फत २३ जनाको उद्धार गरिएको सैनिक जनसम्पर्क तथा सूचना निर्देशनालयले जनाएको छ । उद्धारका लागि दिनभर सेनाको एनए-०३८ एमआई र इकुरेल हेलिकप्टर परिचालन गरिएको थियो ।

सम्पर्कविहीन भएकाहरूको खोजीमा धादिङस्थित नम्बर-६ वाहिनी अड्डाबाट सेनाको टोलीलाई गल्छी हुँदै त्रिशुलीतर्फ र रसुवास्थित श्रीनाथ गणको टोली स्याफ्रुवेशी इलाकातर्फ परिचालन गरिएको थियो । सेनासँगै प्रहरी र सशस्त्र प्रहरीको टोली खटिएको थिए ।

घटनास्थलमा खटिएका जिल्ला प्रहरी कार्यालय रसुवाका प्रहरी निरीक्षक कृष्णबहादुर धितालका अनुसार भन्सार यार्डमा रहेका मालवाहक कन्टेनरका डिब्बा बगाएको छ । उनका अनुसार रसुवागढी जलविद्युत् आयोजनाको ड्याममा ठूलो क्षति पुगेको छ ।

नदीमा पानीको बहाव कम भएपनि सतर्कता अपनाउन स्थानीय प्रशासनले आग्रह गरेको छ । प्रहरी निरीक्षक धितालका अनुसार अहिलेसम्म ७ जनाको शव फेला परेको छ ।

बाढीले रसुवाको उत्तरगया गाउँपालिका-१ मैलुमा रहेको बेलिब्रिज समेत बगाएको छ । सेनाको पोस्ट अगाडि रहेको बेत्रावती-स्याफ्रुवेशी नयाँ सडक खण्डमा पर्ने त्रिशुलीको बेलिब्रिज बगाएपछि स्थानीयको आवतजावत रोकिएको छ । भखरै बनाइएको पक्कीपुल लेदोले छोपिएको छ ।

**प्रधानमन्त्रीदेखि गृहमन्त्रीसम्म बाढीस्थलमा**

सबै कार्यक्रम रोकेर प्रधानमन्त्री केपी शर्मा ओली र गृहमन्त्री रमेश लेखक लगायत सरकारका उच्चपदस्थहरू बाढीस्थलमा पुगेर निरीक्षण गरेका छन् ।

प्रधानमन्त्री ओलीले उद्धारमा केन्द्रित रहने र उद्धारपछि राहत र पुनर्निर्माणमा जोड दिने बताएका छन् । उनले रसुवाका प्रमुख जिल्ला अधिकारी र प्रहरी प्रमुखलाई निर्देशन दिँदै उद्धारमा केन्द्रित हुन निर्देशन दिएका हुन् ।

ओलीले उद्धार गरिएकालाई बासस्थानको प्रबन्ध गरी राहत उपलब्ध गराउन स्थानीय प्रशासनलाई निर्देशन दिएका छन् ।

गृहमन्त्री लेखकले पनि सुरक्षा निकायलाई निर्देशन दिँदै उद्धार र बेपत्ताको खोजीमा लाग्न निर्देशन दिएका छन् ।

**कहाँ के क्षति ?**

नेपाल-चीन जोड्ने मितेरी पुल पूर्णरुपमा क्षति
स्याफ्रुवेशी-रसुवागढी सडक बगायो
रसुवा भन्सारको यार्डमा क्षति
ईभी चार्जिङ स्टेसन
रसुवागढी जलविद्युत आयोजना ड्याममा क्षति
रसुवा भन्सार कार्यालयमा क्षति
सुक्खा बन्दरगाहमा क्षति
ट्रक, कन्टेनर र ईभीसहित करिब १०० गाडी बगायो

**पहिचान खुलेका १५ सम्पर्कविहीन व्यक्ति :**

प्रहरी सहायक निरीक्षक लालबहादुर श्रेष्ठ
प्रहरी जवान मुन्ना ठाकुर
प्रहरी जवान लोकेन्द्र बोहोरा
चिनियाँ नागरिक यु युई
चिनियाँ नागरिक लि हुवाछिङ
चिनियाँ नागरिक याङ छुवान
चिनियाँ नागरिक यु हाई हाङ
चिनियाँ नागरिक यु स्याओ छिउ
चिनियाँ नागरिक चाउ योङ
बर्दियाका जिपन चौधरी
बर्दियाकै सन्तोष दइत
बर्दियाकै बुद्धिराम थारु
बर्दियाकै लक्ष्मी नारायण थारु
बर्दियाकै सुरेश थारु
बाग्लुङका नरेन्द्र विक
सिन्धुपाल्चोकका फुर्वा लामा
सिन्धुपाल्चोककै गोविन्द मोक्तान
ठेगाना नखुलेका लोकमान तामाङ

## कांग्रेस....

टिप्पणी गरिएको छ ।

कांग्रेसबाट सरकारमा रहेका स्वास्थ्यमन्त्री प्रदीप पौडेल र कृषिमन्त्री रामनाथ अधिकारीमाथि भने तुलनात्मक रूपमा कम आलोचना भएको देखिन्छ । तर, अन्य मन्त्रीहरूमाथि ‘ आफ्ना क्षेत्र र गुटका लागि मात्रै काम गर्ने’ प्रवृत्तिको आलोचना भइरहेको छ ।

केन्द्रीय सदस्य प्रतिमा गौतमले मन्त्रीहरूले आफ्ना क्षेत्रका मात्रै बजेट ल्याउने र बाँकी देशलाई बेवास्ता गर्ने प्रवृत्ति अन्त्य गर्न माग गरिन् । ‘मन्त्री भएपछि त राष्ट्रव्यापी दृष्टिकोण आवश्यक हुन्छ,’ उनले भनिन् ।

केन्द्रीय सदस्य कल्याण गुरुङ, तारामान गुरुङ, अब्दुल सतार लगायत नेताहरूले काम नगर्ने मन्त्रीहरूले पार्टीको छवि नै धमिल्याएको भन्दै तत्काल हेरफेरको माग गरेका छन् ।

प्रधानमन्त्री केपी शर्मा ओली स्पेन भ्रमणबाट फर्किसकेका छन् । कांग्रेस नेताहरूका अनुसार बैठकको निष्कर्ष र प्रधानमन्त्रीसँगको परामर्शपछि मन्त्री हेरफेरबारे अन्तिम निर्णय हुने सम्भावना छ ।

सरकारमा रहेका मन्त्रीहरूको आलोचना कांग्रेसभित्र मात्रै होइन, सत्ता साझेदार नेकपा एमालेभित्र पनि चर्किएको छ । यस्तो अवस्थामा एक वर्षको अवसरमा सरकार पुनर्गठन हुने संकेत बलियो देखिएको छ ।

## निलबाराही...

वरिष्ठ इन्जिनियर दिलीप गसी र जियोटेक्निकल इन्जिनियर राजेश्वरी श्रेष्ठले पहिरो न्यूनीकरणका लागि जल निकास सुधार, ढल संरचना सुदृढीकरण र दीर्घकालीन समाधान योजनाको खाँचो औंल्याएका थिए ।

बैठकमा ‘समन्वय, प्राविधिक सुधार र जनसहभागिता’ जस्ता प्रतिबद्धता व्यक्त गरिए पनि कार्यान्वयनतर्फ खासै प्रगति देखिएको छैन । यसले जनस्तरमा पालिकाको भूमिकाप्रति निराशा र आक्रोश बढाएको छ ।

स्थानीय नागरिकको भनाइमा, “हाम्रो सम्पदा हामीले जोगाउनु पर्छ भन्ने भावना बलियो भए पनि सरकारको साथविना दीर्घकालीन सुरक्षा सम्भव छैन ।”

निलबाराही क्षेत्रको संरक्षणका लागि विभिन्न निकायबाट विनियोजित बजेट र योजना अहिलेसम्म कागजमै सीमित छन्। समन्वय बैठकपछि आवश्यक कार्ययोजना, जिम्मेवारी विभाजन र अनुगमन संयन्त्र गठनको पहल नभए, हालका प्रतिबद्धता पनि अरूजस्तै औपचारिकतामा सीमित हुने देखिएको छ ।

विशेषज्ञहरू भन्छन्, निलबाराही मन्दिर केवल धार्मिक स्थल मात्र नभई थिमिको ऐतिहासिक पहिचान हो। यसको संरक्षण सामूहिक प्रयास मात्रले सम्भव छैन; आवश्यक छ स्पष्ट नेतृत्व, पारदर्शी कार्यान्वयन र राजनीतिक प्रतिबद्धता ।

समय अझै छ, तर धेरै छैन। नगरपालिका गम्भीर नभएसम्म निलबाराही क्षेत्रको सुरक्षाका लागि गरिएको समुदायको समर्पण एकतमासको प्रयासमै सीमित हुने खतरा रहन्छ ।

निलबाराहीका संरक्षणमा हजारौंको संख्यामा रहेका श्रमदाताहरुको श्रमको सदुपयोगमा थोरै लगानीमा पनि धेरै काम गर्न सक्ने अवसर नगरपालिकासँग छ । तसर्थ पालिकाबाट आवश्यक पहल गरी मध्यपुर थिमि कै सम्पदा जागाउन र नगरपालिकाको आफ्नो नाराको औचित्य कायम राख्ने दयित्वबाट पछि हट्नु हुँदैन ।

## किड्स....

छन् ।

कार्यक्रम संयोजक तानिया श्रेष्ठका अनुसार यस संस्करणमा करिब १५० बालबालिकाको सहभागिता रहने अपेक्षा गरिएको छ । हालसम्म ८० जना बालबालिकाले नाम दर्ता गराइसकेको जानकारी उनले दिइन् । श्रेष्ठले भनिन्, “साइकल केवल खेलकुदको साधन मात्र होइन, यसले आत्मबल बढाउँछ, समुदायसँग जोड्छ र धेरै साथीहरू बनाउन सहयोग गर्छ । हामीले यस अभियानलाई सामाजिक र व्यक्तित्व विकासको एक हिस्सा बनाएका छौं ।”

उक्त कार्यक्रम भक्तपुर दरबार क्षेत्रबाट सुरु भई नगरको प्रमुख गल्ली र प्रदक्षिणा पथ हुँदै करिब ५ किलोमिटरको साइकल राइडपछि पुनः दरबार क्षेत्रमै समापन हुनेछ । सहभागी बालबालिकालाई समापनमा विविध उपहारहरू प्रदान गरिने पनि आयोजकले जनाएको छ ।

साइकल कनेक्ट भक्तपुरका अध्यक्ष सुमित बाला भन्छन्, “कोरा भन्नाले कुनै पवित्र वा सांस्कृतिक स्थानलाई श्रद्धापूर्वक घुम्ने कार्यलाई जनाउँछ । सन् २०२१ देखि हामीले भक्तपुरमा साइकल संस्कृतिको प्रवर्द्धन गर्दै ‘पैडल र पेडल मैत्री शहर’ निर्माण गर्ने लक्ष्य लिएका छौं । किड्स कोराको मूल उद्देश्य बालबालिकालाई साइकल संस्कृतिको महत्व बाल्यकालदेखि नै सिकाउनु हो ।”

इभेन्टलाई सफल बनाउन विभिन्न संघ, संस्था र समुदायको सहकार्य प्राप्त भएको छ । प्रायोजकका रूपमा गोर्खा इको प्यानल, गोर्खा चाइनिज ईट्टा, गोर्खा विन्डोर, एभरेष्ट इंगलिस स्कुल, जेन्युन इंग्लिस स्कुल, नेपाल इको प्यानल, ड उमामी क्याफे, श्रीमान-श्रीमति राइडर्स, ज्याम कर्नर म्युजिक स्टुडियो, रितेश बाइक क्लिनिक, र जुजु बाइक्सले आर्थिक तथा प्राविधिक सहयोग गरिरहेका छन् ।

त्यसैगरी, कम्युनिटी पार्टनरको रूपमा रिचिन फोटोग्राफी, जेरो वान स्टुडियो, साइकल कल्चर कम्युनिटी, मल्टी टेरेन बाइकिङ, एस्ट्रो फिट क्लब, र पायोनियर ओपन क्रु आबद्ध छन् ।

किड्स कोरा भक्तपुर २०८२ साइकलप्रेमी नयाँ पुस्ताका लागि केवल मनोरञ्जनको कार्यक्रम मात्र होइन, साइकलमार्फत सामाजिक सम्बन्ध, नेतृत्व र स्वाभिमान विकास गर्ने एउटा महत्वपूर्ण अवसरसमेत भएको आयोजकले जनाएको छ ।

## अफताबको....

बताएका छन् ।

रौतहटको राजपुरमा २०६४ साल चैत २७ गते भएको बम विस्फोटपछि स्थानीय इँटाभट्टामा २३ जनालाई जिउँदै जलाएर मारेको आरोप आलमसहितमा लागेको थियो । सो घटनामा जिल्ला अदालत रौतहटले आलमसहित चार जनालाई जन्मकैदको सजाय सुनाएको थियो । तर गत जेठ दोस्रो साता उच्च अदालतका न्यायाधीशद्वय खुसीप्रसाद थारू र अर्जुन महर्जनको इजलासले उनीहरूलाई सफाइ दिएको थियो । उक्त फैसलापछि आलम कारागारमुक्त भएका छन् ।

उक्त निर्णयविरुद्ध पीडित पक्ष तथा आम जनमानसमा व्यापक आलोचना भइरहेको छ । सत्तारूढ नेकपा एमालेका सांसद किरणकुमार साहले प्रतिनिधिसभामा बोल्दै “फैसला राजनीतिक संरक्षणको परिणाम हो” भन्दै न्यायाधीशहरूविरुद्ध महाअभियोग प्रक्रिया अघि बढाउन माग गरेका छन् ।

उनले भने, “यदि सरकार स्वतन्त्र न्यायपालिका चाहन्छ भने न्यायाधीशहरू खुसीराम थारू र अर्जुन महर्जनमाथि तत्काल महाअभियोग प्रक्रिया अघि बढाइनुपर्छ ।”

स्रोतका अनुसार न्यायपरिषद्ले विवादित फैसलापछि बैठक बसेको र ती न्यायाधीशहरूलाई काठमाडौं तानेर हाजिर गराइएको छ । तर कानुन, न्याय तथा संसदीय मामिलामन्त्री अजयकुमार चौरासियाले न्यायाधीशहरूबारे मिडियामा टिप्पणी गर्न अस्वीकार गरेका छन् ।

“अदालतले गर्ने कामबारे म मिडियामा केही भन्न चाहन्न,” मन्त्री चौरासियाले संक्षिप्त प्रतिक्रिया दिएका छन् ।

महान्यायाधिवक्ताको कार्यालयले हाल पुनरावेदन निवेदन तयार गरिरहेको र मुद्दा दर्ता भएपछि आलमलाई पुनः थुनामा राखेर पुर्पक्ष गर्न माग गरिने अधिवक्ता पुष्पराज पौडेलले बताएका छन् । पौडेल पीडितहरूको तर्फबाट निःशुल्क कानुनी सहायता दिँदै आएका छन् । स्मरणीय छ, विसं २०७६ मा आलमविरुद्ध मुद्दा दर्ता भएपछि उनी पक्राउ परेका थिए र ललितपुरस्थित नख्खु कारागारमा थुनामा थिए । जिल्ला अदालतको फैसला आएपछि पनि उनी कारागारमै रहेका थिए । उच्च अदालतको निर्णयपछि हाल उनी स्वतन्त्र छन् ।

## भण्डारीको....

भण्डारीको राजनीतिक दर्शन ‘ जनताको बहुदलीय जनवाद’ को उनी हिमायती भएकाले पनि कार्यकर्तामा उनको प्रभाव रहेको विश्लेषण गरिएको छ । देशभर गरेको एक वर्ष लामो दौडाहाको मूल्यांकन गर्दै उनले १४ असारपछि एमालेमै सक्रिय राजनीति गर्ने घोषणा गरेकी हुन् ।

पूर्वमन्त्री गोकर्ण विष्ट, छविलाल विश्वकर्मा, योगेश भट्टराईजस्ता नेताहरू पहिलेदेखि ओलीसँग असन्तुष्ट रहेका थिए । नेकपा विभाजनका बेला एमालेमै बसेका यी नेताहरू अहिले भण्डारी समूहमा सक्रिय छन् । अर्कोतर्फ, रामबहादुर थापा ‘बादल’ भने खुलेर अभिव्यक्ति नदिए पनि ओली पक्षमै उभिन सक्ने संकेत दिएका छन् ।

एमाले विधानमा ७० वर्ष उमेर सीमा र दुई कार्यकालको सर्त लागू गरिनुपर्ने बहस चलिरहेका बेला भण्डारीको उमेर ६४ वर्ष मात्रै भएकोले पनि उनी सहज रूपमा फेरि नेतृत्व भूमिकामा आउने आंकलन गरेको देखिन्छ ।

यो अवस्थाले एमालेभित्रको शक्ति सन्तुलनमा गहिरो असर पार्ने देखिएको छ । भण्डारी पक्ष बलियो बन्दै गएको संकेतले ओली नेतृत्वलाई चुनौती दिन सक्ने आँकलन गरिँदैछ । यसले ओलीको राजनीतिक भविष्यलाई समेत चुनौती थपिएको राजनीतिक विश्लेषकहरुको धारणा रहेको छ । त्यस्तै एमाले अध्यक्ष पार्टीको आगामी महाधिवेशनबाट पनि पार्टी अध्यक्षमा कायमै रहने ओलीकै विभिन्न क्रियाकलापले स्पष्ट रुपमा देखाएको छ । उनले पूर्वराष्ट्रपति भण्डारीलाई राजनीतिबाट टाढा राख्न गरेको क्रियाकलाप एकपछि अर्को गर्दै असफल भएपछि ओलीले एक कार्यकालको लागि भनेर नयाँ कार्ड प्रयोग गर्न सक्दछन् । जसको पूर्वाभास हाल ओलीका क्रियाकलापबाट पनि स्पष्ट देखिन थालेको छ । यसमा आली कति सफल हुन्छ त्यो आउँदा दिनमा स्पष्ट हुनेछ ।

त्यस्तै सत्ता गठजोडकै क्रममा पनि एमाले अध्यक्ष ओलीले नेपाली कांग्रेसका सभापति शेर बहादुर देउवालाई प्रधानमन्त्रीको पद किस्तीमा राखेर बुझाउने अभिव्यक्ति दिदैं गर्दा अबको ५ महिना पछिको स्थितिले ओलीको भनाई र गराईको वास्तविकता नेपाली जनताले थाहा पाउन सक्ने छ । त्यति बेला सम्मको लागि हेर र पर्खको स्थितिमा रहनु नै उपयुक्त होला ।

इमेल: thimitimes@gmail.com
thimitimes1@hotmail.com
thimi_times@yahoo.com
थिमि TIMES

# "ए ङाला ह्राङ्बा माया" असार २८ गते विशेष प्रदर्शन हुने

काठमाडौं । तामाङ भाषामा निर्मित प्रेमकथामा आधारित चलचित्र 'ए ङाला ह्राङ्बा माया' यही आउँदो असार २८ गते शनिबार, काठमाडौंको नेपाल चलचित्र विकास बोर्ड, चाबहिलमा विशेष प्रदर्शन हुने भएको छ । सांस्कृतिक परिवेश, परम्परा र भावनात्मक सम्बन्धलाई समेट्दै चलचित्रले तामाङ समुदायको मौलिकता र युवा पुस्ताबीचको सम्बन्धलाई गहिरो रूपमा उजागर गर्ने प्रयास गरेको छ। यस चलचित्रलाई तामाङ चलचित्र उद्योगको प्रगतिको प्रतीकका रूपमा हेरिएको छ।

चलचित्रका नायक तथा निर्देशक हुत्त सञ्जय लामा हुन् । नायक एंव निर्देशक हुत्त सञ्जय लामाले क्राबा ङाला सेम, ह्याङ्ला ह्युल, सेमरिन मुला माया, अमर रहोस् हाम्रो माया,बिच्छी,कसम तिमीलाई, जम्काभेट, दुवाली,सानु लगायत एक दर्जन चलचित्रमा नायक एंव निर्देशकको रुपमा अभिनय र निर्देशन गरिसकेका छन ।

निर्माताहरू लोसाङ लामा र इकेश लामा, सहनिर्देशक विश्वजंग माझी, द्वन्द्व निर्देशन राजु दोङ तामाङ र छायांकन प्रज्वल राउतले गरेका छन्। चलचित्र टिमका अनुसार प्राविधिक पक्षमा कुनै सम्झौता नगरिकन सशक्त रूपमा निर्माण गरिएको छ।चलचित्रको शीर्ष गीतमा बिछोड र बियोगको मार्मिक भावना व्यक्त गरिएको छ। उक्त गीतमा नायक हुत्त सञ्जय लामाको प्रभावशाली अभिनय दर्शकको विशेष आकर्षण बन्ने अपेक्षा गरिएको छ।

चलचित्रमा नायक हुत्त सञ्जय लामालाई नायिका सुनिता लुङ्बाले साथ दिएकी छन्। दर्जनौं चलचित्रमा अभिनय गरिसकेकी लुङ्बाले यो चलचित्रलाई विशेष रुपमा आसा राखेको बताए ।

"सबै चलचित्रमा मेहनत गरेकी छु, तर यो चलचित्र हेरेर म आफैं रोएँ," उनले भनिन्, "किनभने यो चलचित्र साँच्चै नै उत्कृष्ट बनेको छ।"

चलचित्रमा हुत्त सञ्जय लामा र सुनिता लुङ्बासँगै तारा थोकर, हेम कुमार तितुङ, प्रज्मी बोम्जन, राजकुमार स्याङ्तान, संगीता बोम्जन, भुइशल लामा, माया देवी मोक्तान, मिलन स्याङ्तान, हिरोज लोप्चन लगायतका कलाकारहरुको अभिनय देख्न पाउनेछ ।काठमाडौं तथा वरपरका दर्शकहरूलाई चलचित्रको विशेष प्रदर्शनमा सहभागी भई साथ दिन आयोजकले हार्दिक आह्वान गरेका छन्। यस चलचित्रले तामाङ भाषिक चलचित्र उद्योगमा नयाँ सन्देश र उचाइ थप्ने विश्वास गरिएको छ।

# पाकिस्तानी कलाकारहरूको सामाजिक सञ्जाल प्रतिबन्ध आंशिक रुपमा हट्यो

एजेन्सी । पहलगाम आतङ्कवादी हमलापछि भारतले पाकिस्तानी कलाकार हरूको सामाजिक सञ्जाल खाताहरूमा लगाएको प्रतिबन्ध आंशिक रूपमा हटाएको छ । अब केही कलाकारहरूको खाताहरू फेरि भारतमा देखिन थालेका छन्, यद्यपि प्रमुख कलाकारहरूका खाताहरू अझै पनि प्रतिबन्धित नै छन् ।

'सनम तेरी कसम' फिल्मबाट चिनिएकी पाकिस्तानी अभिनेत्री मावरा होकेनको इन्स्टाग्राम खाता भारतमा पुनः सक्रिय भएको देखिएको छ । त्यस्तै, सबा कमर, युम्ना जैदी, दानिश तैमुर, र अहद रजा मीर जस्ता कलाकारहरूको खाताहरू पनि भारतमा पहुँचयोग्य भएका छन् ।

तर, अभिनेत्री हानिया आमिर, माहिरा खान, फवाद खान, अली जफर र आतिफ असलमजस्ता चर्चित कलाकारहरूको सामाजिक सञ्जाल खाताहरू अझै पनि भारतमा प्रतिबन्धित छन् । हानिया आमिरको इन्स्टाग्राम खोल्दा 'यो खाता भारतमा उपलब्ध छैन । कानुनी अनुरोधका कारण सामग्रीहरू प्रतिबन्धित गरिएको छ' भन्ने सन्देश देखिन्छ ।

पाकिस्तानी कलाकार हरूको सामाजिक सञ्जालमा प्रतिबन्ध लगाउने निर्णय भारत सरकारले पहलगाम आतङ्कवादी हमलापछि लिएको थियो । यही क्रममा भारतले गृह मन्त्रालयको सिफारिसमा १६ वटा पाकिस्तानी युट्युब च्यानलहरू पनि प्रतिबन्धित गरेको थियो । ती च्यानलहरूले भारत, भारतीय सेना तथा सुरक्षासम्बन्धी निकायहरूविरुद्ध भ्रामक र उत्तेजक सामग्रीहरू प्रवाह गरिरहेको आरोप लागेको थियो ।

यसअघि सन् २०१६ को उरी आक्रमणपछि भारतमा पाकिस्तानी कलाकारहरूको काममा प्रतिबन्ध लगाइएको थियो । माहिरा खान र फवाद खानजस्ता कलाकारहरूले त्यसपछि बलिउडका धेरै परियोजनाबाट बाहिरिनुपरेको थियो । यद्यपि सन् २०२३ मा मुम्बई उच्च अदालतले पाकिस्तानी कलाकारहरूलाई प्रतिबन्ध लगाउने माग खारेज गऱ्यो । अदालतले राजनीतिक तनावका आधारमा कलाकार हरूलाई दण्ड दिन नहुने स्पष्ट पारेको थियो ।

प्रतिबन्ध हटेपछि पाकिस्तानी कलाकारहरू पुनः हिन्दी सिनेमामा देखिन थाले । हानिया आमिरले दिलजीत दोसांझसँग फिल्म 'सरदारजी ३' मा काम गरिन् भने फवाद खान बलिउडमा फिल्म 'अबीर गुलाल' मार्फत पुनरागमन गर्दै थिए । तर, अप्रिल २२ मा पहलगाममा भएको आतङ्कवादी घटनापछि 'अबीर गुलाल' को मे ९ मा तय गरिएको प्रदर्शन स्थगित गरिएको छ ।

'सरदार जी ३' भने भारतको सट्टा विदेशमा मात्र प्रदर्शन भएको छ । दिलजीत दोसांझमाथि पाकिस्तानी कलाकारसँग काम गरेको आरोपमा देशद्रोहको माग उठाइएको छ र उनको नागरिकता खारेज गर्न पनि दबाब बढ्दै गएको छ ।

यसैबीच, अभिनेत्री मावरा होकेनलाई फिल्म 'सनम तेरी कसम २' मा लिने तयारी भइरहँदा प्रमुख अभिनेता हर्षवर्धन राणेले यदि मावरा फिल्ममा रहे, भने आफू त्यसमध्ये नहुने स्पष्ट घोषणा गरेका छन् ।

फिल्म फेडरेशन अफ वेस्टर्न सिने इम्प्लोइजले हालै सूचना तथा प्रसारण मन्त्रालयलाई पत्र लेख्दै भारतीय नागरिकले पाकिस्तानी कलाकारहरूसँग सहकार्य गरेमा उनीहरूमाथि देशद्रोहको मुद्दा लगाउने चेतावनी दिएको छ । साथै, त्यस्ता व्यक्तिलाई भारतीय मनोरञ्जन उद्योगबाट पूर्ण रूपमा बहिष्कार गरिने चेतावनी दिइएको छ ।

# पाटन उच्च अदालतबाट पनि स्ट्यान्डअप कमेडियन अपूर्व दोषी ठहर

काठमाडौं । स्ट्यान्डअप कमेडियन अपूर्व क्षितिज सिंहलाई उच्च अदालत पाटनले पनि दोषी ठहर गरेको छ । जातीय भेदभाव, छुवाछूत र सार्वजनिक शान्ति भंग गर्ने आरोपमा जिल्ला अदालत काठमाडौंले दिएको फैसला उच्च अदालतले पुनरावेदनमा समेत सदर गरेको हो ।

कमेडियन अपूर्वले आफ्नो स्ट्यान्डअप कमेडी प्रस्तुतीमा नेवार समुदायको भाषा, संस्कृति र जातीलाई व्यंग्य गर्ने गरी कटाक्ष गरेपछि नेवार समुदायका प्रतिनिधिहरूले उजुरी दिएका थिए । सिंह मान नवीन, पृथविन्दु महर्जनलगायतले प्रहरीमा उजुरी गरेपछि उनलाई २०७९ साल भदौ दोस्रो साता प्रहरीले पक्राउ गरेको थियो ।

जिल्ला अदालतले मुलुकी अपराध संहिताको दफा १६५ बमोजिम सामाजिक रितिथितिमा खलल पुऱ्याएको ठहर गर्दै उनलाई २ लाख ५० हजार रुपैयाँ धरौटीमा छोड्ने आदेश दिएको थियो । अपूर्वले फैसला चित्त नबुझेर पुनरावेदन दायर गरेका थिए ।

पाटन उच्च अदालतका न्यायाधिश लेखनाथ पौडेल र कृष्ण राम कोइरालाको संयुक्त इजलासले जिल्ला अदालतकै फैसला सदर गर्दै अपूर्वलाई दोषी ठहर गरेको छ । यससँगै उनको विरुद्धको मुद्दामा उच्च अदालतले पनि कारबाही गर्ने बाटो खोलिदिएको छ ।

कमेडियन अपूर्वले नेवाः लवज, नेवाः संस्कृति र त्यससँग सम्बन्धित पर्व-पूजामा व्यंग्यपूर्ण प्रस्तुतिहरू गरेपछि नेवाः समुदायमा व्यापक विरोध भएको थियो । विवाद बढेपछि उनले उक्त स्ट्यान्डअप भिडियो प्राइभेट बनाएका थिए ।

यस घटनाले स्ट्यान्डअप कमेडीमा सांस्कृतिक संवेदनशीलतालाई कसरी लिनुपर्ने भन्ने विषयमा नयाँ बहस सुरु भएको छ ।

# बीटीएसको कमब्याक घोषणा : सन् २०२६ मा नयाँ एल्बम र विश्व भ्रमणको तयारी

काठमाडौं - विश्वभरि लोकप्रिय दक्षिण कोरियन संगीत समूह बीटीएसले आफ्नो कमब्याकको घोषणा गरेको छ । करिब चार वर्षको अन्तरालपछि समूहले नयाँ एल्बम ल्याउने र अन्तर्राष्ट्रिय स्टेजमा पुनः फर्कने तयारी गरेको हो ।

दक्षिण कोरियाको कानुन अनुसार १८ देखि २८ वर्ष उमेरका सबै योग्य पुरुषले अनिवार्य रूपमा १८ महिनादेखि २१ महिनासम्म सैन्य सेवा गर्नुपर्ने व्यवस्था छ । बीटीएसका सबै सदस्यहरूले उक्त अनिवार्य सेवा पूरा गरेका छन् ।

समूहले सन् २०२६ मा नयाँ एल्बम सार्वजनिक गर्ने र त्यसपछि वर्ल्ड टुरमा निस्कने योजना बनाएको छ । हालै बीटीएसका सदस्यहरू जिन, आरएम, भी, जिमिन, जे-होप, जंगकुक र सुगाले अनलाइन फ्यान प्लेटफर्म 'वेभर्स'मार्फत आफ्ना फ्यानहरूलाई यसबारे जानकारी दिएका हुन् ।

दशक लामो सफल यात्रापछि केही समयको विश्राम लिएको बीटीएसले पुनः संगीत क्षेत्रमा फर्किने घोषणासँगै आफ्ना फ्यानहरूलाई उत्साहित बनाएको छ ।



प्रकाशक/कार्यकारी सम्पादकः दीपक श्रेष्ठ, सम्पादकः दीपिका श्रेष्ठ, व्यवस्थापकः दिवस श्रेष्ठ, कार्यालयः सुन्दरनगर, मध्यपुर थिमि-३, भक्तपुर, फोनः ६६३३६५२, ९८५११०२२७३,
मुद्रणः धिम्ले अफसेट प्रेस, अनामनगर, web news portal : www.thimitimes.com.np/